# अहसनुल बयान

## भाग–१

नेपाली अनुवाद
मोहम्मद हारून अन्सारी

प्रकाशक
सलफी वेल्फेयर एण्ड एजुकेशनल सोसाइटी
सारस्वर-४, सप्तरी, नेपाल
फोन नं.: ०३१-५४०००५
०१-४३१५९३८

وزارة الأوقاف والشئون الإسلامية
إدارة الدراسات الإسلامية
المركز الثقافي الإسلامي




التاريخ: ٢١ /١٢/ ٢٠١١ م

# شهادة لمن يهمه الأمر

الحمد لله وحده والصلاة والسلام على من لانبي بعده وبعد:

فإن الشيخ الفاضل/كرم الله منصور/المدرس في المركز الثقافي الإسلامي ممن نشهد له بالخير والصلاح وحبه للتعلم والتعليم ونشرالعلم (ولانزكي على الله أحدا.) وله عدة رسائل وكتب في مجال الدعوة والعقيدة والحديث وترجم عدة كتب في العقيدة والحديث من العربية إلى الأردية والنيبالية وقد قام بمراجعة التفسير الذي بين يدى القارئ المسمى بأحسن التفاسير ترجمة وتفسير معاني القرآن الكريم باللغة النيبالية من أحسن التفاسير للنيباليين عسى الله أن ينفع به الإسلام والمسلمين.

وهو يعتبر من المشايخ المتميزين في المركز الثقافي الإسلامي ونسأل الله تعالى لنا وله الثبات والخير والسير على هذه الطريقة طريق الدعوة والتعليم.

**مشرف عام مراكز تعليم**

**العربية لغير الناطقين بها**

أحمد عبدالله المكنطري
مشرف عام مراكز تعليم الناطقين
بغير اللغة العربية



مبارك الكبير: قطعة (٧) شارع (١٤) منزل (٢٣) بدالة: ٢٥٤٣٣٧٨٨ / ٢٥٤٣٣٧٩٩ فاكس: داخلي / ٢٣

# दुई शब्द

الحمد لله وحده والصلاة والسلام على من لا نبي بعده وبعد:

एक दिनको कुरा हो म आफ्नो खाता खोल्नका लागि भाई हाशिम सँगसँगै बैंकमा गएको थिएँ । बैंक मेनेजर आफ्नो कार्य-कर्तव्यमा व्यस्त हुनुहुन्थ्यो । त्यहाँ भाई हाशिमले मेरो परिचय गराउँदै भन्नुभयो : "उनी मुसलमानहरुका धर्म-गुरुहरुमध्ये एउटा प्रसिद्ध व्यक्ति हुनुहुन्छ ।" त्यसपछि बैंक मेनेजरले मसित पवित्र कुर्आन माग्नुभयो । मैले उहाँलाई भनें "मेरो आफ्नो जानकारी अनुसार अहिलेसम्म पवित्र कुर्आनको नेपाली भाषामा अनुवाद हुन सकेको छैन तर यदि तपाईंलाई हिन्दी भाषामा चाहिन्छ भने म किनेर दिन सक्छु ।" अनि बैंक मेनेजरले भन्नुभयो "म नेपाली हुँ र मलाई नेपाली भाषामा नै अनुवादित पवित्र कुर्आन चाहिन्छ ।" मैले भनें अहिले त सम्भव छैन, त्यसपछि उहाँले मेरो खिल्ली उडाउँदै भन्नुभयो "तपाइं नेपालमा बसेर के गर्दै हुनुहुन्छ ?" त्यो दिनदेखि नै नेपाली समाजसम्म अल्लाहको मधुर सन्देश पुऱ्याउनका लागि मैले पवित्र कुर्आनको नेपाली अनुवाद गराउन अठोट गरें । यसका लागि एउटा राम्रो अनुवादकको आवश्यकता थियो । तर कैयौं महिना अनुवादकको खोजीमा नै समय बित्यो । काठमाडौं पनि गएँ, अनि त्यहाँ पनि सोधपूछ गरें, तर मलाई आफ्नो योजनामा सफलता मिलेन । समय बित्दै गयो, अनि अर्को तर्फ दिन प्रति दिन आवश्यकता बढ्दै गयो । कैयौं महिनाको प्रयासपछि प्राप्त जानकारी अनुसार प्रोफेसर मोहम्मद हारुन अन्सारीलाई यस शुभ कार्यको लागि उहाँसित नम्रतापूर्वक अनुरोध गरें । कामको त आरम्भ भयो तर प्रथम पटक हुनाले यति महत्वपूर्ण काम गर्नु साह्रै गाह्रो नै थियो, जसले गर्दा पनि ढिलो हुँदै गयो ।

अल्लाहको अपार कृपाले एक-एक खण्ड गरी अनुवाद हुँदै गयो र अर्को तर्फ प्रकाशित पनि हुनथाल्यो । जसलाई अधिकांश पाठकवर्गले मन पराए अनि म अल्लाहमाथि पूर्ण विश्वास गरी आफ्नो काममा नियमित रुपमा प्रयासरत रहें र सकेसम्म यसका लागि आर्थिक लगानी पनि गर्दै गएँ । इंडियन कन्टिनेनटल कमिटी कुवेतको सहयोग सधैं प्राप्त हुनाले उनीहरुको आदेश बमोजिम पुनरावलोकनका लागि "जमीअत अहले हदीस" का सदस्यहरुलाई दिएँ । उनीहरुको रिपोर्ट अनुसार अझै यसमा केही त्रुटिहरु बाँकी नै थिए, जसको संशोधनका लागि उक्त कमिटीले जमीयतका कार्य-कर्ताहरुलाई लगायो । जसमा अझै ढिलो हुँदै गयो । अर्को तर्फ मैले "तफ़सीर अहसनुल बयान" लाई प्राथमिकता दिई फेरिदेखि नयाँ तरिकाले काम गर्न थालें । प्रथम भागको समाप्तिपछि इंडियन कन्टिनेन्टल कमिटीलाई मैले उपहारको रुपमा एउटा अनुवादित पवित्र कुर्आन दिएँ । त्यसै यात्रामा भाइ करमुल्लाह अब्दुर्रउफ मदनीसँग पनि भेटघाट भयो, उहाँले पनि हेर्नुभयो, र ठाउँ-ठाउँबाट पढेर यसको प्रशंसा पनि गर्नुभयो । तर दूर्भाग्यले सूरह

बकरहको आयत नं. ८४ छुटेको थियो, जसतर्फ र अन्य केही त्रुटिहरुको सुधार गर्न भाई करमुल्लाहले परामर्श दिनुभयो। मैले उनको नेपाली भाषामा लगनशीलता र कार्य-सफलता हेरी पुनरावलोकनका लागि आग्रह गरें। उनले यस शुभ कार्यका लागि रात-दिन प्रयास गरि शुरुंदेखि अन्त्यसम्म कैयौं महिनाको निरन्तर प्रयासपछि आफ्नो कार्य-कर्तव्यका साथ-साथै पुनरावलोकनको काम पनि पूरा गर्नुभयो। म आफ्ना समस्त सहयोगीहरुप्रति आभार व्यक्त गर्दछु जसले यस महान योजनामा कुनै पनि किसिमको सहयोग प्रदान गर्नुभयो, विशेषरुपले आदरणीय श्री मोहम्मद हारुन अन्सारीप्रति जसले आफ्ना बृद्ध-अवस्था तथा विभिन्न शारीरिक अस्वस्थताका बावजूद पनि रात-दिन एक गरी यस कार्यलाई सम्पन्न गर्नुभयो। यसै क्रममा आदरणीय शैख़ करमुल्ला मन्सूरप्रति कृतज्ञता व्यक्त गर्दछु, जसले आफ्नो अत्यन्त व्यस्तता हुँदाहुँदै पनि, पूरा समय दिई पूर्ण लगनशीलताका साथ प्रत्येक शब्द अध्ययन गर्नुभयो र विभिन्न ठाउँमा आवश्यक सुधार गर्नुभयो। अनुवादक प्रोफेसर हारुन अन्सारी र पुनरावलोकनकर्ता भाई करमुल्लाह अब्दुर्रउफ मदनी दुवैलाई अल्लाहले यस पुण्य कार्यका लागि लोक तथा परलोकमा उचित प्रतिफल प्रदान गरून्। आमीन

**पाठकवर्ग :** आफ्नो ज्ञान अनुसार नेपाली भाषामा पवित्र कुर्‌आनको यो प्रथम व्याख्या हो जसलाई तयार पार्न अत्यन्तै कडा परिश्रम गर्नुपर्‍यो। तापनि यसमा हामी कहाँसम्म सफल भएका छौं यसको निर्णय त पाठकवर्गको हातमा नै छ। यसमा जे-जति हामीलाई सफलता प्राप्त भएको छ, त्यो अल्लाहको तर्फबाट नै हो तर यदि केही कमी-कमजोरी बाँकी छ भने त्यो हाम्रो आफ्नो कमीले गर्दा हो जसबाट अल्लाह र उहाँको सन्देष्टा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम मुक्त हुनुहुन्छ। साथै पाठकवर्गसित हार्दिक अनुरोध छ कि यदि यसमा कुनै प्रकारको त्रुटि पाउनुभयो भने हामीलाई अवश्य जानकारी गराउनु होला। आगामी संस्करणमा इन्शा अल्लाह अवश्य नै हामी त्यसको सुधार गर्नेछौं।

अल्लाहसित बिन्ती छ कि उहाँले हाम्रो यस प्रयासलाई स्वीकार गरून्, यसलाई नेपाली भाषा-भाषीहरुका लागि अति लाभदायक बनाउन् र हामीलाई कुनै पनि प्रकारले सहयोग पुऱ्याउनु हुने सम्पूर्ण दाजुभाईहरुलाई राम्रो प्रतिफल प्रदान गरून्। आमीन

अध्यक्ष
रजाउल्लाह रहमतुल्लाह
सलफी वेल्फेयर एण्ड एजुकेशनल सोसाइटी
सारस्वर, सप्तरी, नेपाल।

# अनुवादकीय

अल्लाह तआलाको असीम अनुकम्पाले पवित्र कुर्आनको नेपाली अनुवाद तथा व्याख्या पाठक-वर्ग समक्ष प्रस्तुत गर्न पाउँदा हर्षको अनुभूति गर्दछु । अरबी र नेपाली भाषाहरूका परम्परा तथा शैलीहरूमा निकै अन्तर भएकाले नेपालीमा अनुवाद निश्चय नै एउटा कठिन काम हो, तैपनि यसलाई साधारण पाठकले बुझ्ने गरी सरल तथा स्पष्ट एवं ग्राह्य रूपमा लेख्ने सकभर प्रयास गरिएको छ ।

यो महत्वपूर्ण कार्य शैख मोहम्मद रज़ाउल्ला सल्फी (मदनी) को अदम्य साहस, लगनशीलता तथा प्रयास एवं सहयोगबाट सम्पन्न भएको हो । यसभन्दा अगाडि मौलानाकै अग्रसरतामा कुर्आन करीमको सर्वप्रथम नेपाली अनुवाद सम्वत् २०५५ सालमा पृथक-पृथक खण्डहरु गरी प्रकाशित भएको थियो, तर केही प्राविधिक, छपाइ तथा त्रुटिहरूले गर्दा, सीमित वितरण मात्र भएको थियो ।

यस संस्करणमा कमी एवं त्रुटिहरू हुन गएमा पाठक-वर्गका सुझावहरू स्वागतयोग्य हुनेछन् र अर्को संस्करणमा परिमार्जन गरी समावेश गरिने छन् ।

अन्तमा प्रार्थना गर्दछु कि यो प्रयास अल्लाह छेउ स्वीकार्य होस् तथा यसबाट पाठक-वर्ग बढी भन्दा बढी लाभान्वित हुन सकून् । आमीन !

विनीत

**प्रो. मोहम्मद हारून अन्सारी**
महादेवस्थान, वार्ड नं. ३ 'ख'
चेकपोष्ट, थानकोट,
काठमाडौं ।
फोन न.०१४३१५९३८

بسم الله الرحمن الرحيم

शुरु अल्लाहको नामबाट जो अत्यन्तै दयालु तथा अपार कृपालु हुनुहुन्छ ।

# भूमिका

الحمدلله رب العالمين والصلاة والسلام على سيد الأنبياء والمرسلين وعلى آله وصحبه أجمعين ومن تبعهم بإحسان إلى يوم الدين وبعد:

सम्पूर्ण प्रशंसा तथा प्रत्येक प्रकारका गुणगान अल्लाहकै लागि छन् जो सम्पूर्ण सृष्टिका स्रष्टा र वास्तविक पालन-पोषणकर्ता हुनुहुन्छ । उहाँको चीर-शान्ति होस् (अल्लाहका सबै सन्देष्टा तथा सन्देशवाहकहरुमाथि विशेषगरि सबैका लागि) सर्वश्रेष्ठ तथा अन्तिम सन्देष्टा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम, उहाँको घर-परिवार, श्रद्धालु साथी र संसार बाचुञ्जेल उहाँका सम्पूर्ण अनुयायीहरुमाथि ।

## पवित्र कुर्आनको अवतरण :

संसारमा बाचुञ्जेल मानिसलाई जे-जति चिज-वस्तुको आवश्यकता छ, ती सबैलाई अल्लाहले हाम्रो कल्याणका निम्ति पहिलादेखि नै तयार पार्नुभएको छ । उदाहरणका लागि सूर्य, चन्द्रमा, पृथ्वी, हावा, पानी, वन-जङ्गल, पशुपंक्षी र यस ब्रम्हाण्डका सम्पूर्ण चिज-वस्तुहरु आदि इत्यादि । यिनलाई गम्भिरतापूर्वक हेर्दा यस्तो लाग्छ कि यी सबै हाम्रा लागि सृजना गरिइएका हुन् र हामी नै यसबाट अति लाभान्वित हुन्छौं । तर हाम्रो हृदयमा यो प्रश्न उत्पन्न हुन्छ कि हामीलाई अल्लाहले के को लागि जन्माउनु भएको छ ? हाम्रो जीवनको प्रमुख कारण के हो ? संसारमा बाचुञ्जेल के गर्नाले अल्लाह प्रसन्न हुनुहुन्छ र मृत्युपश्चात स्वर्ग पनि प्रदान गर्नुहुन्छ ? नरकबाट मुक्ति कसरी प्राप्त हुन्छ ? र के गर्नाले हामी आफ्नो परीक्षामा सफल भई सदा-सर्वदाका लागि पारलौकिक स्वर्गीय जीवनमा ईश्वरीय अनुकम्पाका पात्र हुनेछौं ?

वास्तवमा यसप्रकारका प्रश्नहरुको कुनै न कुनै अवश्य उत्तर हुनुपर्छ । अनि त्यस तर्फ नै मार्गदर्शनका लागि अल्लाहले प्रथम नबी (सन्देशवाहक) आदरणीय आदमदेखि अन्तिम सन्देष्टा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमसम्म एक लाख चौबीस हजार नबी र रसूल-सन्देष्टा तथा सन्देशवाहकहरुलाई संसारको विभिन्न स्थानमा आवश्यकता अनुसार पठाउनुभयो । साथै धार्मिक सिद्धान्तका लागि उनीहरुमध्ये केही सन्देष्टाहरुमाथि आकाशीय ग्रन्थ पनि अवतरित गर्नुभयो । जसमध्ये तौरात, जबूर, इन्जील र पवित्र कुर्आन प्रसिद्ध छन् ।

पवित्र कुर्आन अन्तिम आकाशीय ग्रन्थ हो । यो मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमलाई अल्लाहको तर्फबाट प्रदान गरिएको सबभन्दा ठूलो चमत्कार हो । यसका वाणीहरु वास्तवमा अल्लाहका पवित्र कथन तथा मधुर सन्देश हुन् । सम्पूर्ण संसारमा यसको समतुल्य अन्य कुनै ग्रन्थ छैन । यो आफ्नो अवतरण कालदेखि आजसम्म जस्ताका त्यस्तै सुरक्षित छ र संसार बाजुञ्जेल अल्लाहको

वचन अनुसार सुरक्षित रहनेछ। कसैले यसमा कुनै पनि प्रकारको केही परिवर्तन गरेको छैन र न कहिल्यै यसमा केही परिवर्तन गर्न नै सक्छ। यो एउटा यस्तो ग्रन्थ हो जसको पठन-पाठन संसारमा सबभन्दा बढी हुन्छ। संसारको कुना-काप्चामा यसलाई कण्ठस्त गरेका अनिगन्ती बाल-बालिका, युवक-युवती र पुरुष-महिलाहरु छन्। देशभूमि र भाषा छुट्टाछुट्टै भएतापनि अल्लाहको कृपाले यसलाई सजिलैसँग कण्ठ गर्छन्।

यसको अवतरणको कारणमध्ये यो पनि हो कि मानिसहरु सनदेष्टाहरुको सत्यतामाथि शङ्का गर्थे। यसर्थ जुन सन्देष्टाको समयमा जस्तो चमत्कारको आवश्यकता थियो। उहाँहरुलाई त्यसै प्रकारका चमत्कार प्रदान गरी उहाँहरुको सत्यतामाथि अल्लाहले प्रमाण प्रस्तुत गर्नुभयो। अन्तिम सन्देष्टा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको समयमा अरबमा अरबी भाषाको सर्वत्र धूमधाम थियो। मानिसहरुलाई आ-आफ्ना रचनामाथि अत्यन्तै गर्व थियो। यसर्थ अल्लाहले अरबी भाषामा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लममाथि पवित्र कुर्आनलाई आवश्यक अनुसार २३ वर्षको लामो अवधिमा अवतरित गरी सम्पूर्ण मानिस तथा जिन्न प्राणीहरुलाई विशेषगरि मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको सत्यतामाथि शङ्का गर्ने मानिसहरुलाई आह्वान गर्नुभयो कि यदि तिमीहरुलाई उहाँको सत्यतामाथि विश्वास छैन भने उहाँमाथि अवतरित भएका श्लोक जस्ता श्लोक रचेर पेश गर तर उनीहरुले तयार पार्न सकेनन् र न संसार बाचुन्जेल कसैले तयार नै पार्नसक्छ। जस्तै अल्लाह तआलाको कथन छ : "तपाईं भनिदिनुस् कि यदि सम्पूर्ण मनुष्य तथा जिन्न प्राणीहरु एकजुट भएर पनि पवित्र कुर्आन जस्तो कुनै ग्रन्थ ल्याउन चाहे भने कहिल्यै पनि ल्याउन सक्दैनन्, यद्यपि यसका लागि उनीहरुले एक-अर्काको सहयोग नै किन नगरुन्। (सूरह बनी इस्राईल-८८)

यसैप्रकार सूरह हूदमा मात्र दस सूरह ल्याउन आह्वान गरिएको छ: जस्तै अल्लाहको कथन छ : "के तिनीहरुले पवित्र कुर्आनलाई मुहम्मदले रचेका भन्छन्? तपाईं भनिदिनुस् : त्यसो भए तिमीहरुले पनि यसप्रकार रचिएका दस वटा सूरह ल्याऊ, र यसका लागि अल्लाहबाहेक जसलाई चाहन्छौ बोलाऊ, यदि तिमीहरु आफ्नो कुरामा सत्यवान छौ।" (सूरह हूद-१३)

बरु सूरह तूरमा मात्र एउटै श्लोक प्रस्तुत गर्न आह्वान गरिएको छ : जस्तै अल्लाह तआलाको कथन छ : "के यिनीहरुले भन्छन् कि यसलाई तपाईंले आफैं रच्नुभएको छ? बरु वास्तविक कुरा यो हो कि यिनीहरु ईमान ल्याउन चाहँदैनन्। यदि यिनीहरु आफ्नो कुरामा सत्यवान छन् भने यस्तो एउटै पनि श्लोक तयार पारेर ल्याऊन्।" (सूरह तूर/३३-३४)

सूरह बकरहमा अल्लाहले यो पनि स्पष्ट गरिदिनुभएको छ कि सम्पूर्ण मानिस र उनका सहयोगीहरु एकत्रित भएर पवित्र कुर्आन जस्तै एउटा सूरह पनि

कहिल्यै पेश गर्न सक्दैनन् जस्तै अल्लाहको कथन छ : "र यदि तिमीहरुलाई हामीले आफ्ना भक्त (मुहम्मद) माथि अवतरित गरेका ग्रन्थ सन्दर्भमा सन्देह छ भने तिमीहरु पवित्र कुर्आनभ्रैं मात्र एउटा सूरह रचना गरी ल्याऊ र यसका लागि अल्लाहबाहेक आफ्ना सम्पूर्ण सहयोगीहरुलाई बोलाऊ यदि तिमीहरु सत्यवान छौ । अनि यदि यसो गर्न कदापि सक्दैनौ भने त्यो आगोसित तर्स जसको इन्धन मनुष्य तथा ढुङ्गा हुनेछन् ।" (सूरह अल-बकरह/२३-२४)

पवित्र कुर्आनका केही विशेषताहरु :

(१) अल्लाह तआलाले पवित्र कुर्आनलाई सबैका निम्ति अवतरित गर्नुभएको छ। जस्तै अल्लाहको कथन छ : "हे मानव हो ! आफ्ना त्यस पालन-पोषणकर्ताको उपासना गर जसले तिमी र तिमीभन्दा अघिका मानिसहरुको सृष्टि गरे ताकि तिमीहरु उनैको डर-भय राख ।" (सूरह अल-बकरह/२१)

अल्लाह तआलाले पवित्र कुर्आनमा यसप्रकार कतिपय स्थानमा "याअय्योहन्नास" (हे मानव !) भनी सम्पूर्ण मानिसलाई सम्बोधन गर्नुभएको छ । यसर्थ पवित्र कुर्आन सबैको मार्गदर्शनका लागि अवतरित भयो । कुनै विशेष समुदाय, जाति, थरी वा धर्मावलम्बीका लागि होइन । यसर्थ पवित्र कुर्आनलाई मात्र मुसलमानहरुको मार्गदर्शक ग्रन्थ भन्नु असत्य कुरा हो । पवित्र कुर्आनले जस्तै मुस्लिमहरुलाई सम्बोधन गर्छ त्यसैप्रकार नास्तिक, कपटी र बहुईश्वरवादी आदि सबैलाई आफ्नो वास्तविक ईश्वरलाई चिन्न र उहाँको आदेश अनुसार जीवन व्यतीत गर्न मार्गदर्शन गर्छ ।

(२) पवित्र कुर्आन बाहेक अन्य आकाशीय ग्रन्थहरुमा मानिसहरुले आ-आफ्ना इच्छानुसार परिवर्तन गरिदिएका छन् जबकि पवित्र कुर्आन यसबाट सुरक्षित छ र संसार बाँचुन्जेल कहिल्यै पनि यसमा परिवर्तन गर्न सकिदैन । जस्तै अल्लाहको कथन छ : "निःसन्देह हामीले नै यसलाई अवतरित गरेका छौं र हामी नै यसको सुरक्षा गर्छौं ।" (सूरह अल-हिज्र/९)

(३) अल्लाहको आदेशानुसार संसारमा मानिसलाई शान्तिपूर्ण जीवन व्यतीत गर्नका लागि पवित्र कुर्आनमा आस्था, उपासना, आचरण, हक-अधिकार, वैध-अवैध र मार्गदर्शन आदि सम्बन्धी आवश्यक अनुसार सम्पूर्ण कुराहरु छन् । जस्तै अल्लाहले पवित्र कुर्आनमा भन्नुभएको छ :"...र हामीले तपाईंमाथि पवित्र कुर्आन अवतरित गरेका छौं जसमा प्रत्येक कुरा स्पष्ट पारिएको छ र जो आज्ञाकारीहरुका निम्ति मार्गदर्शन, कृपा र शुभ-सूचना हो ।" (सूरह अन् नहल/८९)

स्पष्ट रहोस् कि यसको कदापि यो अर्थ होइन कि हदीसको आवश्यकता छैन । वरु पवित्र कुर्आनलाई वास्तवमा मान्नुको अर्थ पवित्र कुर्आन र सही हदीस दुवैलाई मान्नु हो ।

## मानव जीवनमाथि पवित्र कुर्‌आनको प्रभाव :

पवित्र कुर्‌आन अल्लाह तआलाको पवित्र वाणी हुनाले यसको मानव समाजमाथि विशेषगरि ठूलो प्रभाव छ। मानिस त मानिस जिन्न प्राणीहरु पनि पवित्र कुर्‌आन सुनेर प्रभावित भएका कुरा हामीलाई अवगत नै छ। इस्लामी इतिहास पढ्दा तपाईं यसमाथि थुप्रै उदाहरण पाउनुहुन्छ र वर्तमान युगमा पनि कतिपय ठूला-ठूला विद्वानहरुको इस्लाममा प्रवेश गर्नुको कारण पवित्र कुर्‌आनको सत्यता, वास्तविकता र उनीहरुमाथि यसको आश्चर्यजनक प्रभाव नै हो। उदाहरणका लागि निम्नलिखित व्यक्तिहरुको सन्दर्भमा संक्षेपमा पढ्नुहोस्:

(१) उमर फारुक रज़ियल्लाहु अन्हु: तपाईंलाई राम्ररी थाहा होला कि आदरणीय उमर रज़ीयल्लाहु अन्हु इस्लाममा प्रवेश गर्नुअघि इस्लाम धर्म र मुसलमानहरुको कति ठूलो शत्रु हुनुहुन्थ्यो। बरु एक दिन मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको नै हत्या गर्नका लागि हातमा तरवार लिएर उहाँको खोजीमा घरबाट निस्कनु भयो। बाटोमा नै हुनुहुन्थ्यो कि बहिनीले इस्लाममा प्रवेश गरेको कुरा अकस्मात थाहा पाएर त्यहींबाट सोझै बहिनीको घरतर्फ लाग्नुभयो। घरमा पवित्र कुर्‌आनको पठन-पाठन हुँदैथ्यो। जसलाई उमरले ढोका नजिक पुग्ने वित्तिकै सुनेर रिसले आगोझैं हुनुभयो। उमर आएको थाहा पाएर आदरणीय खब्बाब पुत्र अरत्त घर भित्र नै लुकि हाल्नुभयो। उमर घरभित्र पसेर बहिनी र ज्वाईंलाई यति पिट्नुभयो कि रगत बग्न थाल्यो। पछि आफैं उनीहरुले पढिरहेका ग्रन्थ (सहीफा) पढ्नका लागि माग्नुभयो तर बहिनीले भनिन् कि तपाईं अपवित्र हुनुहुन्छ, पहिला नुहाउनुहोस् त्यसपछि मात्र पढ्न सक्नुहुन्छ। आदरणीय उमरले नुहाएर उक्त सहीफा माँगेर पढ्न थाल्नुभयो। पढ्दा-पढ्दै सूरह ताहाको निम्नलिखित आयतसम्म पुग्नुभयो :

"إنني أنا الله لاإله إلا أنا فاعبدني وأقم الصلاة لذكرى" ( سورة طه: 14 )

"निःसन्देह म नै अल्लाह हुँ। मबाहेक अन्य कोही उपास्य छैन। यसर्थ मेरै भक्ति गर र मलाई स्मरण गर्न नमाज पढ।"

यस आयतबाट यति प्रभावित हुनुभयो कि मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको ठेगाना सोधी "दारे अर्कम" मा आफैं गएर इस्लाम धर्मको मूलमन्त्र पढी त्यतिखेर नै इस्लाममा प्रवेश गर्नुभयो :

" أشهد ألا إله إلاالله وأشهد أنك رسول الله "

"अश्हदु अल्लाहइलाहा इल्लल्लाहु व अश्हदु अन्नक रसूलुल्लाह।"

"म गवाही दिन्छु कि अल्लाह बाहेक अन्य कोही वास्तविक पूज्य छैन र म गवाही दिन्छु कि तपाईं अल्लाहका सन्देष्टा हुनुहुन्छ।"

(विस्तृत जानकारीका लागि पढ्नुहोस्: अर्रहीकुल मख्तूम (उर्दू संस्करण) पृष्ठ : १७६-१८१)

## मानव जीवनमाथि पवित्र कुऱ्आनको प्रभाव :

पवित्र कुऱ्आन अल्लाह तआलाको पवित्र वाणी हुनाले यसको मानव समाजमाथि विशेषगरि ठूलो प्रभाव छ। मानिस त मानिस जिन्न प्राणीहरु पनि पवित्र कुऱ्आन सुनेर प्रभावित भएका कुरा हामीलाई अवगत नै छ। इस्लामी इतिहास पढ्दा तपाई यसमाथि थुप्रै उदाहरण पाउनुहुन्छ र वर्तमान युगमा पनि कतिपय ठूला-ठूला विद्वानहरुको इस्लाममा प्रवेश गर्नुको कारण पवित्र कुऱ्आनको सत्यता, वास्तविकता र उनीहरुमाथि यसको आश्चर्यजनक प्रभाव नै हो। उदाहरणका लागि निम्नलिखित व्यक्तिहरुको सन्दर्भमा संक्षेपमा पढ्नुहोस्:

(१) उमर फारुक रजियल्लाहु अन्हु: तपाईंलाई राम्ररी थाहा होला कि आदरणीय उमर रज़ीयल्लाहु अन्हु इस्लाममा प्रवेश गर्नुअघि इस्लाम धर्म र मुसलमानहरुको कति ठूलो शत्रु हुनुहुन्थ्यो। बरु एक दिन मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको नै हत्या गर्नका लागि हातमा तरवार लिएर उहाँको खोजीमा घरबाट निस्कनु भयो। बाटोमा नै हुनुहुन्थ्यो कि बहिनीले इस्लाममा प्रवेश गरेको कुरा अकस्मात थाहा पाएर त्यहींबाट सोझै बहिनीको घरतर्फ लाग्नुभयो। घरमा पवित्र कुऱ्आनको पठन-पाठन हुँदैथ्यो। जसलाई उमरले ढोका नजिक पुग्ने बित्तिकै सुनेर रिसले आगोझैं हुनुभयो। उमर आएको थाहा पाएर आदरणीय खब्बाव पुत्र अरत्त घर भित्र नै लुकि हाल्नुभयो। उमर घरभित्र पसेर बहिनी र ज्वाईंलाई यति पिट्नुभयो कि रगत बग्न थाल्यो। पछि आफैं उनीहरुले पढिरहेका ग्रन्थ (सहीफा) पढ्नका लागि माग्नुभयो तर बहिनीले भनिन् कि तपाई अपवित्र हुनुहुन्छ, पहिला नुहाउनुहोस् त्यसपछि मात्र पढ्न सक्नुहुन्छ। आदरणीय उमरले नुहाएर उक्त सहीफा माँगेर पढ्न थाल्नुभयो। पढ्दा-पढ्दै सूरह ताहाको निम्नलिखित आयतसम्म पुग्नुभयो :

"إننى أنا الله لاإله إلا أنا فاعبدنى وأقم الصلاة لذكرى" ( سورة طه: 14 )

"नि:सन्देह म नै अल्लाह हुँ। मबाहेक अन्य कोही उपास्य छैन। यसर्थ मेरै भक्ति गर र मलाई स्मरण गर्न नमाज पढ।"

यस आयतबाट यति प्रभावित हुनुभयो कि मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको ठेगाना सोधी "दारे अर्कम" मा आफैं गएर इस्लाम धर्मको मूलमन्त्र पढी त्यतिखेर नै इस्लाममा प्रवेश गर्नुभयो :

" أشهد ألا إله إلاالله وأشهد أنك رسول الله "

"अश्हदु अल्लाहइलाहा इल्लल्लाहु व अश्हदु अन्नक रसूलुल्लाह।"

"म गवाही दिन्छु कि अल्लाह बाहेक अन्य कोही वास्तविक पूज्य छैन र म गवाही दिन्छु कि तपाई अल्लाहका सन्देष्टा हुनुहुन्छ।"

(विस्तृत जानकारीका लागि पढ्नुहोस्: अर्रहीकुल मख्तूम (उर्दू संस्करण) पृष्ठ : १७६-१८१)

(२) तुफैल बीन अरम दौसी रजियल्लाहु अन्हु :

उहाँ असल चरित्र, उत्तम सद्भावका प्रतिष्ठित मानिस, कवि र आफ्नो समुदायको बुद्धिजीवि तथा प्रमुख व्यक्ति हुनुहुन्थ्यो । मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको ईशदूतत्वको ११ वर्षपछि उहाँ मक्का आउनुभयो । मक्का पुगेपछि त्यहाँका नास्तिकहरुले उहाँका निकै आदर-सम्मान गरे । साथै मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको सन्देशबाट प्रभावित भएका व्यक्तिहरुको घर-परिवारमा हुने वाद-विवादको चर्चा गर्दै उहाँसित कुराकानी नगर्ने र उहाँको कुरासम्म नसुन्ने परामर्श दिए । यसर्थ उहाँले बिहान अल्लाहको पवित्र घर काबा जाँदा आफ्नो कानमा ऊन हाल्नुभयो ताकि मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको कुरा कानमा नपरोस् । तर पनि अल्लाहको कृपाले मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमले पढिरहेका सर्वोत्तम ग्रन्थका केही श्लोक आदरणीय तुफैलले अकस्मात सुन्नुभयो अनि मनमनै यो विचार गर्न थाल्नुभयो कि म आफ्नो समाजको प्रमुख, बुद्धिजीवि र सत्य-असत्यमा फरक छुट्याउने व्यक्ति, आखिर ममाथि यस्तो प्रतिबन्ध किन लगाइयो ? त्यसर्थ ऊन कानबाट निकालेर फ्याँक्नुभयो र यो धारणा लिएर मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको प्रतिक्षा गर्न थाल्नुभयो कि यदि उहाँको कुरा राम्रो लाग्यो भने स्वीकार गर्छु नत्र आफ्नो बाटो लाग्नेछु । अनि मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम घर फर्किरहेको बेला उहाँका पछि-पछि उहाँको घर जानुभयो । त्यसपछि आफ्नो परिचय गराउँदै नास्तिकहरुले उहाँलाई गरेको आदर -सम्मान, व्यवहार, सुझाव-सल्लाह र त्यस पश्चात कानमा हालेको ऊन सन्दर्भमा शुरुदेखि अन्तिमसम्म सम्पूर्ण कुराकानीको संक्षिप्त विवरण बताउनुभयो । मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमले इस्लामको परिचय गराउँदै पवित्र कुर्आनका केही श्लोक उहाँलाई सुनाउनुभयो । उहाँको कथन छ कि त्यसभन्दा अघि मैले कहिल्यै पनि यस्तो बहुमुल्य र सत्य-तथ्य कुरा सुनेको थिएन । अनि पवित्र कुर्आनको मधुर सन्देश सुनेर अति प्रभावित भई म त्यहाँ नै इस्लाममा प्रवेश गरिहालें । अल्लाहु अकबर,

(विस्तृत जानकारीका लागि पढ्नुस्: अर्रहीकुल मख्तूम (उर्दू संस्करण) पृष्ठ: २३१-२३२)

**पवित्र कुर्आनका लाभहरु :**

अल्लाहले मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमलाई सर्वश्रेष्ठ सन्देष्टा तथा सन्देशवाहक र उहाँका समुदायलाई सर्वोत्तम समुदाय बताउनुभएको छ । त्यसैप्रकार उहाँमाथि अवतरित धर्मग्रन्थ पवित्र कुर्आनलाई अन्तिम आकाशीय ग्रन्थ हुनको साथ-साथै सर्वोत्तम तथा अनुपम ईशवाणीको स्थान पनि प्रदान गर्नुभएको छ । यसर्थ यसलाई पठन-पाठन गर्न-गराउन र यसको अध्यनमा कति पुण्य प्राप्त हुन्छ ? उक्त सन्दर्भमा तल केही हदीसको नेपाली अनुवाद प्रस्तुत गरिएको छ । तिनलाई ध्यानपूर्वक पढ्नुहोस :

(१) "तिमीहरुमध्ये सबभन्दा सर्वोत्तम मानिस त्यो हो जसले पवित्र कुर्आन सिक्छ र अरुलाई सिकाउँछ ।" (हदीसको संग्रह : बुखारी र मुस्लिम)

(२) "(संसारमा कुर्आनका पाठकलाई परलोकमा भनिनेछ) पढ्दै जाऊ र चढ्दै जाऊ, अनि जसरी तिमीहरु संसारमा पढ्दैथ्यौ त्यसरी नै पढ्दै गर, तिम्रो वासस्थान (स्वर्गमा) त्यहाँ हुनेछ जहाँ अन्तिम श्लोक समाप्त हुन्छ।"(हदीसको संग्रह : तिर्मिजी)

(३) "पवित्र कुर्आन पढ किनकि यसले आफ्ना पाठकहरुका लागि–अल्लाहको दरबारमा सिफारिश गर्नेछ।"(हदीसको संग्रह : मुस्लिम)

(४) जसले पवित्र कुर्आनको एउटा अक्षर पढ्छ भने त्यसलाई पुण्य प्राप्त हुन्छ, र एउटा पुण्य दस गुनासम्म बढाइन्छ। अलिफ. लाम. र मीम छुट्टाछुट्टै तीनवटा अक्षर हुन्।" (हदीसको संग्रह तिर्मिजी)

पवित्र कुर्आनका चाहे जुनसुकै पनि सूरह तथा आयत हुन् पढ्नु अति नै पुण्यको काम हो। तर केही यस प्रकारका पनि हदीसहरु छन् जसमा कुनै कुनै सूरह वा आयत जस्तै सूरह फ़ातिहा, सूरह बकरह, सूरह आले इमरान, सूरह कहफ–खासगरि प्रत्येक शुक्रवारको दिन– सूरह यासीन, सूरह रहमान, सूरह वाकिअह, सूरह सफ्फ, सूरह जुम्अह, सूरह मुल्क, सूरह हाक्कह, सूरह इख्लास, सूरह फलक र सूरह नास–मुऔव्जजतैन– आदि इत्यादि र यसैप्रकार आयतहरुमध्ये आयतुल कुर्सी र सूरह बकरहका अन्तिम २ आयत पढ्नप्रति विशेषगरि प्रोत्साहित गरिएको छ। तर यसको कदापि यो तात्पर्य हुँदैन कि अन्य सूरह र आयतको हैसियत केही कम छ बरु यसबाट नबी सल्लल्लाहु अलैहि व सल्लमले पवित्र कुर्आनको पठन-पाठन गर्न-गराउन प्रति हाम्रो ध्यान आकर्षण गराउनुभएको छ र यसबाट हुने लाभलाई स्पष्ट पार्नुभएको छ। तर खेदको कुरा यो हो कि कतिपय हाम्रा दाजुभाइ तथा दिदी बहिनीहरुले पवित्र कुर्आन स्वस्थ्यको अवस्थामा पढ्दैनन् अनि जब मृत्युका केही प्रभाव प्रकट हुनथाल्छ भने पवित्र कुर्आनका पठन-पाठन गर्ने केही बालकहरुलाई घर बोलाएर सूरह यासीन आदि पढ्न लगाउँछन्। जबकि तिनीहरुको यो कर्म कुनै सही हदीसबाट प्रमाणित छैन। यसरी नै अन्य केही हाम्रा साथीहरुले चिहान (कब्र) को नजिक पवित्र कुर्आन पढ्न कसैलाई लगाउँछन् वा आफै त्यहाँ गई मृतकलाई पुण्य पुऱ्याउनका लागि सूरह फ़ातिहा आदि पढ्छन्। यस प्रकारका कर्मको गणना इस्लाम धर्मको दृष्टिकोणमा बिद्अत (नवीन आविष्कार) मध्ये हुन्छ। अनि बिद्अतको सम्बन्धमा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभएको छ :"जसले इस्लाम धर्ममा कुनै यस्तो कर्म गऱ्यो जो चाहिं हाम्रो आदेशमध्ये छैन भने त्यो रद्द गरिन्छ।"

(हदीसको संग्रह : बुख़ारी र मुस्लिम)

अन्य केही अर्को साथीहरु पवित्र कुर्आनका केही श्लोक सानो अक्षरमा लेखेर वा लेखाएर तअ्वीज (जन्त्र) को रुपमा घाँटी, पाखुरा र हात आदिमा बाँध्छन् र यो आस्था राख्दछन् कि यसो गर्नाले रोगबाट मुक्ति प्राप्त हुन्छ। वास्तवमा यो

उनीहरुको भ्रम हो। पवित्र कुर्आन पढ्न र त्यस अनुसार कर्म गर्नाले मानिसको आत्मालाई वास्तविक शान्ति प्राप्त हुन्छ। तअ्वीज (जन्त्र) बाँध्नाले कदापि मानिसको कल्याण हुनछैन। बरु कतिपय पटक तअ्वीज (जन्त्र) लाई खोलेर हेर्दा त्यसमा कुर्आनको नाममा चामल, कालो धागो र अन्य थुप्रै प्रकारका चीजहरु भएको थाहा पाइएको छ। फेरि यदि वास्तविकता यस्तो छ भने यसबाट निको हुनुको आस्था राख्नु शिर्क (अल्लाहको हक-अधिकारमा अरुलाई समावेश गर्नु) हुन्छ। जस्तै हदीसमा छ : "जसले तअ्वीज बाँध्यो, उसले शिर्क गऱ्यो।"

(हदीसको संग्रह : मुस्नद अहमद)

स्पष्ट रहोस् कि शिर्क सबभन्दा ठूलो पाप हो। यसर्थ यदि कसैको मृत्यु शिर्कको नै अवस्थामा भएको छ भने अल्लाहले त्यसलाई कहिल्यै पनि क्षमा गर्नुहुन्न।

**पवित्र कुर्आन र विज्ञान :**

पवित्र कुर्आन र विज्ञान छुट्टाछुट्टै हुन्। पवित्र कुर्आन अल्लाहको वाणी हो, जबकि विज्ञान मानिसहरुको अनुसन्धानको प्रतिफल हो। जसमा वैज्ञानिकहरुलाई कहिले सफलता प्राप्त हुन्छ भने कहिले असफल हुन्छन्। एउटा वैज्ञानिकले साह्रै कठिन परिश्रम गरेर केही अनुसन्धान गर्छ तर केही वर्षपछि अन्य अर्को वैज्ञानिकहरुले आ-आफ्ना अनुसन्धान बमोजिम उक्त अनुसन्धानहरुमध्ये कतिपय धारणालाई असत्य ठहऱ्याउँछन्। जस्तै "के मानिस बाँदरबाट जन्मेको प्राणी हो ?" आदि दृष्टिकोणको वास्तविकता प्रष्ट भइसकेको छ। तर पवित्र कुर्आनमा नत्र कुनै परिवर्तनको खाँचो छ र न कसैले यसमा परिवर्तन नै गर्नसक्छ। साथै यसका सम्पूर्ण सन्देश आ-आफ्ना ठाउँमा सदासर्वदाका लागि सत्य-तथ्य छन्।

अर्को कुरा के हो भने मानिसको जन्म अल्लाहको कृपाले वीर्यको माध्यमले हुन्छ। त्यो वीर्य आमाको गर्भाशयमा कति दिनसम्म नुत्फा (वीर्य) कति दिनसम्म अलका (ढिक्को रगत) र कति दिनसम्म मुज्गा (मासुको डल्लो) को रुपमा परिवर्तन हुन्छ। नबी सल्लल्लाहु अलैहि व सल्लमले अल्लाहको मार्गदर्शन बमोजिम आजभन्दा लगभग १४०० वर्ष अघि नै यसलाई प्रष्ट पार्नुभएको थियो, जबकि वैज्ञानिकहरु मात्र केही वर्षअघि अनुसन्धान गरी त्यहाँसम्म पुग्नमा सफल भएका छन्। अल्लाहु अक्बर !

यसर्थ हाम्रो मार्गदर्शक पवित्र कुर्आन हो विज्ञान होइन। तर विज्ञानले पवित्र कुर्आनले भविष्यवाणी गरेका केही वास्तविकतालाई प्रमाणित गर्छ भने त्यसबाट अझ इस्लाम धर्मको वास्तविकता प्रष्ट हुन्छ। अन्यथा पवित्र कुर्आन आफ्नो स्थानमा सत्य-तथ्य ग्रन्थ हो। जसमा शङ्काको कुनै आवश्यकता छैन। किनकि हामी सबैका स्रष्टा अल्लाह तआलाले नै भन्नुभएको छ:

"ذلك الكتب لاريب فيه" (سورة البقرة /2)

"त्यो (पवित्र कुर्आन) यस्तो ग्रन्थ हो जसमा कुनै शङ्का छैन।"

**पवित्र कुर्‌आनको महत्व एउटा अर्को दृष्टिकोणले:**

मानिसले आफूले तयार पारेको नियम-कानून तथा विधि-विधानको आदर-सम्मान गर्छ। त्यसलाई सुरक्षित स्थानमा सम्मानतापूर्वक राख्छ र त्यस बमोजिम जीवनयापन गर्न प्रयासरत रहन्छ। जबकि हामीसँग अल्लाहले हाम्रो कल्याणका लागि नै रचेको सत्य-तथ्य संविधान पवित्र कुर्‌आनको रुपमा छ। जसमा लाभ नै लाभ छ। यसर्थ अल्लाहको वाणी पवित्र कुर्‌आनको सम्बन्धमा हाम्रो दायित्व के कस्तो हुनुपर्‍यो ? र हामी यसका हक-अधिकार र आदर-सम्मान कसरी गर्नसक्छौं ? यो हाम्रो आजको सबभन्दा महत्वपूर्ण प्रश्न हो।

पवित्र कुर्‌आनको अवतरण पढ्न र त्यस बमोजिम कर्म गर्नका लागि भएको छ। यसर्थ हामीमाथि अनिवार्य हुन्छ कि पवित्र कुर्‌आनको पठन-पाठन गरौं, यसलाई ध्यानपूर्वक दिन-रात पढौं, साथै अर्थ बुझ्न प्रयास गरौं, पवित्र कुर्‌आनमा लुप्त रहस्यहरुलाई जानौं, श्लोकहरुको परिभाषामाथि चिन्तन-मनन गरौं, पहिलाका समुदायहरुका सर्वनाशको वर्णन आउँदा अल्लाहसित प्रायश्चित गरौं र उनीहरुले गरेको पापको नजिक पनि नजाऔं। अल्लाहका आज्ञाकारी भई शान्तिपूर्ण जीवन व्यतीत गरौं, उहाँको आज्ञा उल्लंघनबाट स्वयं बचौं र अरुहरुलाई पनि बचाऔं। पवित्र कुर्‌आनको तालिम विरुद्ध हानिकारक तथा मानवघातक क्रियाकलापमा संलग्न नहोऔं। प्रत्येक प्रकारका पाप, अपराध, अत्याचार, व्यभिचार, दमन, शोषण, गलत रणनीति र दानवीय मार्गलाई त्यागी असल क्रियाकलापमा संलग्न भई अल्लाहलाई प्रसन्न पारौं र सदा-सर्वदाका लागि स्वर्गका पात्र बनौं। यसैमा सम्पूर्ण मानव समाजको सांसारिक तथा पारलौकिक कल्याण छ। जस्तै अल्लाह तआलाले भन्नुभएको छ :

"الذين آتيناهم الكتب يتلونه حق تلاوته اولئك يؤمنون به ومن يكفربه فأولئك هم الخاسرون" ( سُورة البقرة /121 )

"ती व्यक्तिहरु जसलाई हामीले ग्रन्थ प्रदान गर्‍यौं, त्यसलाई जस्ताका त्यस्तै पढ्छन्, उनीहरु नै त्यसमाथि आस्था राख्छन् र यसलाई नकार्नेहरु हानिमा छन्।"

**पवित्र कुर्‌आन पढ्नु अघिका केही आवश्यक कुराहरु :**

पवित्र कुर्‌आनबाट हामी कसरी पूर्णरुपमा लाभान्वित हुनसक्छौं ? यसमा लुप्त रहस्यहरुलाई कसरी खोज्न सक्छौं ? र यसले हामीमाथि आफ्नो प्रभाव कसरी पार्नसक्छ ? यस प्रकारका कुराहरुको सन्दर्भमा निम्नलिखित बुँदाहरुलाई ध्यानमा राखि त्यस बमोजिम कर्म गर्नाले इन्शाल्लाह पर्याप्त प्रतिफल तथा लाभ प्राप्त हुनेछ।

(१) सर्वप्रथम कुरा यो हो कि हृदयदेखि नै पूर्णरुपमा यो आस्था राख्नुपर्छ कि पवित्र कुर्‌आन अल्लाहको अनुपम कथन हो। जसलाई उहाँले मानव समाजको कल्याणका लागि जिब्रीलद्वारा २३ वर्षको लामो अवधिमा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लममाथि आवश्यक अनुसार अवतरित गर्नुभयो।

(२) आत्माको शुद्धीको साथ-साथै शरीरलाई पवित्र राख्नु।

(३) शरीर, वस्त्र र स्थानको पवित्रतापछि पवित्र कुर्‌आन पढ्नुअघि वुजू गर्नु ।

(४) संभव छ भने दतिवन गर्नु, किब्लातर्फ अनुहार गरी राम्ररी बस्नु र पवित्र कुर्‌आनलाई भूईंमा नराख्नु आदि ।

(५) पवित्र कुर्‌आन पढ्दा यसतर्फ ध्यान दिनुपर्छ कि तपाईं अल्लाहका वाणीहरु पढिराख्नुभएको छ र अल्लाहले अरुहरुलाई मार्गदर्शन गरे जस्तै तपाईंको पनि मार्गदर्शनका लागि यसलाई अवतरित गर्नुभएको छ ।

(६) अरवी भाषा सिक्नु किनभने अरबी भाषामा यदि तपाईं पवित्र कुर्‌आन पढ्नुहुन्छ भने त्यसको प्रभाव छुट्टै हुन्छ र अक्षरहरुको उच्चारण पनि सजिलैसँग गर्न सकिन्छ ।

(७) अरबी भाषा आउँदैन भने सकेसम्म चाँडै अरबी भाषा सिक्नुपर्छ अन्यथा पवित्र कुर्‌आनको अनुवाद तथा परिभाषा पढेर पवित्र कुर्‌आनबाट लाभ प्राप्त गर्न सकिन्छ ।

(८) अरबी भाषा थाहा भएको अवस्थामा पनि पवित्र कुर्‌आनको अनुवाद र व्याख्या पढ्नु र त्यसमा चिन्तन-मनन गर्नु लाभदायक हुनेछ ।

(९) पवित्र कुर्‌आनलाई दिन-रातमा जतिखेर पनि पढ्न सकिन्छ तर खासगरि रातिमा एकान्तको अवस्थामा ध्यानपूर्वक पढ्नु सर्वोत्तम हुनेछ ।

(१०) पवित्र कुर्‌आनमा वर्णित घटना, अनुकम्पा तथा दण्ड-सजाय तर्फ ध्यान आकर्षण गर्नुपर्छ । उदाहरणको लागि फ़िरऔनलाई संसारमा अल्लाह तआ़लाले के-कति धन-अधिकार प्रदान गर्नुभएको थियो तर उसले अल्लाहको आज्ञा उल्लंघन गऱ्यो र मूसा अलैहिस्सलाम र उहाँको समुदायलाई नानाथरी प्रकारले दण्ड दिने प्रयास गर्दैरहयो अनि अल्लाहले उसलाई अन्ततः समूद्रमा डुबाइदिनु भयो र सम्पूर्ण संसारवासीहरुको मार्गदर्शनका लागि त्यसको शवलाई संसार बाचुन्जेल सुरक्षित राख्न आफैं जिम्मेवारी लिनुभयो । यसर्थ फिरऔनको मृत्युको कैयन हजार वर्षपछि आज पनि उसको शव मिश्रमा सुरक्षित छ र संसार बाचुन्जेल सुरक्षित रहनेछ । जबकि संसारका अन्य कति ठूला-ठूला मानिसहरुको मृत्युपछि मानिसहरुले तिनको शवलाई सुरक्षित राख्न अत्यन्तै प्रयास गरे तर आफ्नो योजनामा असफल भई केही वर्षपछि तिनलाई फ्याँकिदिए ।

**पवित्र कुर्‌आनकै पानाबाट :**

पवित्र कुर्‌आनमा के-कस्ता आदेश-निर्देश तथा रहस्यहरु छन् तिनलाई त आफैं पढेर सकेसम्म खोज्न सक्नुहुन्छ । जति यसमा चिन्तन-मनन गर्नुहुन्छ त्यति नै यसमा भएका ईश्वरीय आदेशहरु प्रष्ट हुँदै जान्छन् । उदाहरणका लागि तल संक्षेपमा केही आयतको नेपाली अनुवाद प्रस्तुत गरिएको छ । यिनलाई ध्यानपूर्वक पढ्नुहोस् ।

(१) "के तिनीहरु पवित्र कुर्आनमाथि सोच-विचार गर्दैनन् ? यदि यो अल्लाह तआलाको अतिरिक्त अन्य कसैको तर्फबाट अवतरित भएको भए अवश्य यसमा धेरै विरोधभासहरु पाउँथे ।" (सूरह अन्-निसा/८२)

(२) "...निःसन्देह जसले कुनै निर्दोष व्यक्ति वा धर्तीमा दङ्गा-फसाद नमच्चाउने मानिसको हत्या गऱ्यो भने त्यो यस समान छ कि उसले सम्पूर्ण मानवजातिकै हत्या गऱ्यो तर जसले कसैको ज्यान बचायो भने मान कि उसले मानिसहरुलाई नै जीवन दान गऱ्यो ।" (सूरह अल्माइदा/३२)

(३) "रमजानको महिना त्यो महिना हो जसमा पवित्र कुर्आन अवतरित गरियो, यो सम्पूर्ण मानिसहरुका निम्ति मार्गदर्शन हो, यसमा सत्य-असत्यबीच फरक छुट्याउने स्पष्ट प्रमाणहरु छन्..... । (सूरह अल बकरह/१८५)

(४) "(अल्लाहबाहेक) प्रत्येक प्राणीले मृत्युको स्वाद चाख्नेछ र महाप्रलयको दिन तिमीहरुलाई आ-आफ्ना कर्मको जस्ताका त्यस्तै प्रतिफल दिइनेछ, परन्तु जसलाई नरकबाट मुक्ति प्रदान गरियो र स्वर्गमा प्रवेश गराइयो भने त्यो वास्तवमा सफल भयो र सांसारिक जीवन त मात्र धोकाको सामग्री हो ।" (सूरह आले इमरान/१८५)

(५) "निःसन्देह अल्लाहको नजिक स्वीकार्य धर्म इस्लाम नै हो....।" सूरह आले इमरान/१९) र सूरह आले इमरानमै आयत नं. ८५ मा छ : "र जसले इस्लामबाहेक अन्य धर्मलाई रोज्छ भने त्यो स्वीकार गरिने छैन र उ परलोकमा घाटा उठाउनेहरुमध्ये हुनेछ ।"

**नेपाली भाषामा अनुवाद तथा व्याख्याको आवश्यकता:**

आज नेपालका अधिकांश मुस्लिम दाजुभाइ तथा दिदी-बहिनीहरुलाई अरबी भाषा राम्ररी पढ्न आउँदैन । कारण जेसुकै होस् यो वास्तविक कुरा हो कि नेपालका मुस्लिमहरु वर्तमानसम्म पर्याप्त संख्यामा अशिक्षित, इस्लामी प्रारम्भिक ज्ञानबाट अनभिज्ञ, धार्मिक क्रियाकलापमा पिछडिएका र पवित्र कुर्आन र सही हदीसको तालिमबाट अति नै टाढा छन् । अर्को केही अरबी भाषामा ठूला-ठूला अक्षरमा लेखेका सानातिना प्रार्थना, पवित्र कुर्आन र सही हदीसका केही भाग पढ्नका लागि त पढ्छन् तर तिनका अर्थ र परिभाषालाई बुझ्न सक्दैनन् ।

यो कति दुखको कुरा हो कि पवित्र कुर्आनका प्रथम अवतरित श्लोकहरुमा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमलाई पढ्न आदेश दिइयो, जबकि त्यति बेला मक्का र त्यसको वरिपरिमा पाप नै पाप हुन्थ्यो । मानिसहरु रक्तपातमा लतपत र चोरी डकैतीमा अग्रसर थिए, एक-अर्काका हक-अधिकार हनन गर्थे, छोरीलाई बाल्यकालको अवस्थामा खाल्टो खनेर त्यसमा तिनलाई जीवित नै फ्याँकिदिन्थे । जथाभावी रुपमा जीवन व्यतीत गर्थे, गरीबले पाप गरेमा दण्ड दिइन्थ्यो तर धनीले त्यही पाप गर्दा उसलाई केही पनि हुँदैनथ्यो । बरु यो भन्दा पनि दुखको कुरा यो थियो कि मानिसहरुले आफ्नो वास्तविक स्रष्टा तथा पालन-पोषणकर्तालाइ बिर्सेर नानाथरी

प्रकारका जीव-जन्तु तथा रुख-विरुवाको पूजा-पाठ गर्थे र मृत्युपश्चात प्राप्त हुने पुनर्जीवनमाथि विश्वास नै गर्दैनथे । अल्लाहको पवित्र घर काबामा मूर्तिहरुको पूजा-पाठ हुन्थ्यो । यो भन्दा अझ ठूलो पाप के हुनसक्छ कि मानिसहरु एकेश्वरवादको सत्य-तथ्य मार्ग त्यागी बहुईश्वरवादको मार्गमा लागि पथभ्रष्ट भइसकेका थिए । त्यस्तो पनि दुखद अवस्थामा अल्लाह तआलाले मुहम्मद सल्लल्लाहु अलैहि व सल्लममाथि शिक्षा सम्बन्धी पवित्र कुर्आनका सर्वप्रथम पाँच आयत अवतरित गरी उहाँलाई सर्वप्रथम शिक्षा प्राप्तिका आदेश दिनुभयो । अल्लाह नै सर्वज्ञाता हुनुहुन्छ । अनि जब उहाँका अनुयायीहरु शिक्षा प्राप्त गर्नथाले, सत्य-असत्यमा विभिन्नता जान्न प्रयासरत भए र शिक्षित भई ज्ञानको आधारमा जीवनयापन गर्नथाले त आफैं सम्पूर्ण प्रकारका पाप, अपराध, अत्याचार र अन्याय आदि सखाप हुनलाग्यो । चोरी डकैती जस्ता कुकर्मलाई पनि मानिसहरुले त्याग्न थाले । यहाँसम्मकि महिलाहरुलाई बाटो-घाटोमा कसैले बाधा-विघ्न पार्दैनथ्यो । अमन कायम भयो, आत्मालाई शान्ति प्राप्त भयो र मानव समाजको उन्नति हुनलाग्यो र ती मानिसहरु नै सम्पूर्ण अरबदेशमाथि शासन गर्नथाले । नवी सल्लल्लाहु अलैहि व सल्लमले सत्य भन्नुभएको छ :

"إن الله يرفع بهذا الكتب أقواما ويضع به الآخرين"مسلم

"अल्लाहले यस ग्रन्थको आज्ञापालन गर्नाले कतिपय समुदायलाई उच्चतम प्रदान गर्नुहुन्छ, तर अन्य केहीलाई यसको आज्ञा उल्लंघन गर्नाले ध्वस्त गरिदिनु हुन्छ ।"

यसर्थ आजको हाम्रो सबभन्दा ठूलो आवश्यकता यो हो कि हामी पवित्र कुर्आन पढौं, त्यसको अर्थ र परिभाषा पवित्र कुर्आन र सही हदीसहरुको आधारमा जान्ने प्रयास गरौं । जसलाई अल्लाहले मानव समाजको मार्गदर्शनका लागि अवतरित गर्नुभएको छ ।

यस प्रकारका नै आवश्यकता पूर्तिका लागि नेपाली भाषामा पवित्र कुर्आनको अनुवाद तथा व्याख्या गराइएको छ । आदरणीय शैख रजाउल्लाह पुत्र रहमतुल्लाह मदनी अध्यक्ष "सलफी वेलफेयर एण्ड एजुकेशनल सोसाइटी" ले यसका लागि अत्यन्तै कडा परिश्रम गरी पवित्र कुर्आनको नेपाली भाषामा अनुवाद तथा व्याख्या गराउनुभएको छ । अल्लाहले उहाँलाई लोक तथा परलोक दुबैमा यसका पुण्य प्रदान गरून् ।

प्रो. मोहम्मद हारुन अन्सारी साहेबले दिनानुदिन साह्रै कठिन परिश्रम गरी "तफ़सी अहसनुल बयान" हिन्दी संस्करणलाई नेपालीमा (व्याख्यासहित अनुवाद) रुपारन्तरण गरि इस्लाम धर्मको सेवामा ठूलो योगदान दिनुभएको छ । अल्लाहले उहाँलाई स्वस्थ राखि अझ इस्लाम धर्मको सेवा गर्ने शुभ अवसर प्रदान गरून् र यसका पर्याप्त प्रतिफल लोक र परलोकमा उहाँलाई देऊन् ।

**अनुवाद तथा व्याख्याको सन्दर्भमा :**

(१) पवित्र कुर्‌आन र सही हदीसको आधारमा व्याख्या गरिएको छ ।

(२) आवश्यक अनुसार आस्था, इतिहास र गर्नुपर्ने प्रार्थनाको परिभाषा गरिएको छ ।

(३) पवित्र कुर्‌आनका आयत वा हदीस लेख्दा त्यसका श्रोतहरु दिइएका छन् ।

(४) हदीस जईफ अर्थात् निम्नस्तरको भएमा स्पष्ट पारिएको छ ।

(५) गलत धारणा तथा आस्थाको खण्डन गरिएको छ ।

(६) आयतमा वर्णित गाह्रो शब्दहरुको सर्वसाधारणहरुले बुझ्ने खालको अर्थ लेखिएको छ ।

(७) सहाबा तथा ताबेईनबाट प्रमाणित व्याख्यालाई नै प्राथमिकता दिइएको छ ।

(८) आवश्यक अनुसार सूरहहरुको लाभ सम्बन्धी हदीस उल्लेख गरिएको छ ।

(९) कुनै घटनाको वर्णन गर्दा प्रमाणित पुस्तकहरुलाई नै आधार बनाइएको छ ।

(१०) सर्वसाधारणले बुझ्ने खालको भाषा प्रयोग गरिएको छ आदि इत्यादि ।

अल्लाहको अपार कृपाले म यसलाई शुरुदेखि अन्तिमसम्म पढेको छु । अनि आवश्यक अनुसार कतिपय ठाउँमा सानो टिप्पणी र केही प्रचलित गलत धारणाको खण्डन पनि गरेको छु । आशा गरिन्छ कि यसबाट सर्वसाधारणलाई इस्लामको वास्तविक आस्था, शिक्षा र पवित्र कुर्‌आनको मधुर सन्देश बुझ्नमा केही सहयोग प्राप्त होला । तापनि मानवताको कारणले हुनसक्छ कि कतिपय ठाउँमा अझ पनि केही सानातिना त्रुटि बाँकि नै होला, यसर्थ पाठक वर्गसित हार्दिक अनुरोध गरिन्छ कि यदि तपाईंले यसमा त्यस्ता केही त्रुटि पाउनुभयो भने हामीलाई अवश्य जानकारी गराउनु होला । आगामी संस्करणमा इन्शा अल्लाह अवश्य त्यसलाई सच्याई लिइनेछ ।

मलाई पूर्ण विश्वास छ कि यसबाट सर्वसाधारणलाई अति नै लाभ होला र साथै हाम्रो यो प्रयास पवित्र कुर्‌आनको अर्थ बुझ्न, त्यसको व्याख्या जान्न र त्यस अनुसार कर्म गर्नका लागि पनि अति सहायकसिद्ध होला ।

अल्लाहले हाम्रो यस प्रयासलाई स्वीकार गरी यसबाट सम्पूर्ण मानिसहरुलाई लाभ पुऱ्याऊन् र हामीलाई कुनै पनि प्रकारले सहयोग पुऱ्याउने सम्पूर्ण साथीहरुलाई त्यसका पर्याप्त प्रतिफल प्रदान गरुन् । लोक तथा परलोक दुवैमा सबैको वास्तविक कल्याण होस् यो नै हाम्रो विन्ती छ ।

विनीत
करमुल्लाह पुत्र अब्दुर रउफ मदनी
शिक्षक
इस्लामी शैक्षिक तथा सांस्कृतिक केन्द्र
औकाफ मन्त्रालय
कुवेत ।

| | | |
|---|---|---|
| पुस्तक | : | **कुर्आन मजीद** (नेपाली अनुवाद तथा व्याख्या) |
| अनुवादक | : | प्रोफेसर मोहम्मद हारुन अन्सारी |
| प्रकाशक | : | सलफी वेल्फेयर एण्ड एजुकेशनल सोसाइटी सारस्वर-४, सप्तरी, नेपाल |
| सर्वाधिकार | : | प्रकाशकमा सुरक्षित |
| पहिलो संस्करण | : | २०५५ साल (अनुवाद) |
| दोस्रो संस्करण | : | २०६५ भाद्र (अनुवाद तथा व्याख्या सहित) |
| कम्प्युटर सेटिङ्ग तथा नेपाली टाइप | : | जाहिद कमाल अन्सारी |

# कुर्आन मजीदका सूरतहरुको अनुक्रम सूची

# कुरआन मजीदका सूरतहरुको अनुक्रम सूची

# कुर्आन मजीदका सूरतहरुको अनुक्रम सूची

# कुरआन मजीदका सूरतहरुको अनुक्रम सूची

# कुर्आन मजीदका सूरतहरुको अनुक्रम सूची

# कुर्आन मजीदका सूरतहरुको अनुक्रम सूची

## सूरतुल फ़ातिहा-१

سُورَةُ الْفَاتِحَةِ

सूर: फ़ातिहा[१] मक्कामा अवतरित भयो,[२] यसमा सात आयत छन् ।[३]

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ ①

(१) अल्लाह बडो दयावान अति करूणामयीको नामबाट प्रारम्भ गर्दछु ।[४]

الْحَمْدُ لِلَّهِ رَبِّ الْعَالَمِينَ ②

(२) सबै प्रशंसा[५] अल्लाह सर्वलोकको पालनकर्ताको लागि छ ।[६]

الرَّحْمَٰنِ الرَّحِيمِ ③

(३) बडो दयावान अति करूणामयी छ[७]

مَالِكِ يَوْمِ الدِّينِ ④

(४) निर्णयका दिन (क़यामत) को स्वामी छ[८]

إِيَّاكَ نَعْبُدُ وَإِيَّاكَ نَسْتَعِينُ ⑤

(५) हामी तिम्रै इबादत (उपासना) गर्दछौं तथा तिमीसितै सहायता माँग्दछौं[९]

اهْدِنَا الصِّرَاطَ الْمُسْتَقِيمَ ⑥

(६) हामीलाई सोझो (सत्य) बाटो देखाउ[१०]

صِرَاطَ الَّذِينَ أَنْعَمْتَ عَلَيْهِمْ غَيْرِ الْمَغْضُوبِ عَلَيْهِمْ وَلَا الضَّالِّينَ ⑦

(७) तिनीहरुको बाटो जसमाथि तिमीले उपकार गर्‍यौ[११] तिनीहरुको होइन जसमाथि प्रकोप भयो तथा, न पथ-विचलितहरुको ।[१२]

---

[१] सूर: फातिहा पवित्र कुरआनको प्रथम सूर: हो । हदीसहरुमा यसको अति नै महत्व बर्णन गरिएको छ । فاتحة फ़ातिहाको अर्थ 'आरम्भ' हो, यसैले यसलाई الفاتحة अलफ़ातिहा अर्थात् 'फातिहतुल किताब' भनिन्छ । यसका अन्य कैयन् नामहरु पनि हदीसहरुबाट प्रमाणित छन्– जस्तै उम्मुल कुरआन, अस्सबउल मसानी, अल कुरआनुल अजीम, अर्रुक़िया الرقية (मंत्र), जस्तो कि एक सहाबीले एउटा विच्छीले डसेकालाई यसबाट मंत्र गर्दा त्यो व्यक्ति स्वस्थ भइहाल्यो । नबी सल्लल्लाहु अलैहि वसल्लमले सोध्नु भयो तिमीलाई कसरी ज्ञान भयो कि यो मंत्र हो ? तथा अन्य नाम छन् । यसको अर्को महत्वपूर्ण नाम الصلاة (अस्सलात) पनि हो, जस्तो कि एउटा हदीस कुदसीमा छ, अल्लाह तआलाको कथन छ :

«قَسَمْتُ الصَّلَاةَ بَيْنِي وَبَيْنَ عَبْدِي».

"मैले सलात (नमाज़) लाई आफु तथा आफ्नो उपासकको बीच विभाजित गरिदिएको छु।"

(अलहदीस, सहीह मुस्लिम, किताबुल सलात)

**अभिप्राय सूरः** फ़ातिहा हो, जसको आधा भाग अल्लाहको स्तुति-प्रशंसा तथा त्यसको दयालुता, पालन-पोषण एवं न्याय तथा राज्यको बर्णनमा छ, तथा आधा भागमा प्रार्थना-विनय छ जुनकि उपासक अल्लाहसित गर्दछ। यस हदीसमा सूरः फ़ातिहालाई "नमाज़बाट" व्यंजित गरिएको छ, जसबाट विदित हुन्छ नमाज़मा यसलाई पढ्नु अनिवार्य छ। जस्तो नबी सल्लल्लाहु अलैहि वसल्लमका कथनहरुबाट राम्ररी स्पष्ट गरिदिइएको छ।

«لَا صَلَاةَ لِمَنْ لَمْ يَقْرَأْ بِفَاتِحَةِ الْكِتَابِ»

"त्यस व्यक्तिको नमाज़ पूरा हुँदैन, जसले सूरः फ़ातिहा पढेन"।

(सहीह बुख़ारी तथा सहीह मुस्लिम)

यस हदीसमा مَن (जुन व्यक्ति) साधारण शब्द हो, जसमा प्रत्येक नमाज़ी सम्मिलित छ। एक्लो होस् अथवा इमामको पछाडी मुक्तदी (अनुयायी), सिर्री (मसिनो स्वरमा) नमाज़ होस् अथवा जहरी (ठूलो स्वरको) नमाज़। अनिवार्य (फर्ज़) नमाज़ होस् अथवा नफ्ल (स्वेच्छाले) प्रत्येक नमाज़ीको लागि सूरः फ़ातिहा पढ्नु अनिवार्य छ। यसको साधारणताको समर्थन त्यस हदीसबाट हुन्छ जसमा यो उल्लेख गरिएको छ कि एक पटक फर्ज़को नमाज़मा केही सहावा पनि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसँग कुर्आन पढ्दै गरे जसको कारणले उहाँलाई पढ्न अफ्ठ्यारो भइ हाल्यो। नमाज़ समाप्त भए पछि हजूर (सल्लल्लाहु अलैहि वसल्लम) ले प्रश्न गर्नुभयो : के तिमीहरु पनि साथ-साथै पढिराखेको हो ? उनीहरुले स्वीकार गरे पछि हजुर (सल्लल्लाहु अलैहि वसल्लम) ले भन्नुभयो :

«لَا تَفْعَلُوا إِلَّا بِأُمِّ الْقُرْآنِ؛ فَإِنَّهُ لَا صَلَوٰةَ لِمَنْ لَّمْ يَقْرَأْ بِهَا»

"तिमीहरु यसो न गर (अर्थात् सँगसँगै पढ्ने न गर) तर हो, सूरः फ़ातिहा अवश्य पढ्दै गर, किनभने यो नपढिकन नमाज़ हुँदैन" (अबूदाऊद, नसाई र तिर्मिजी) यस प्रकार अबू हुरैराले भन्नुभयो कि नबी (सल्लल्लाहु अलैहि वसल्लम) ले भन्नुभयो :

«مَنْ صَلَّى صَلَوٰةً لَمْ يَقْرَأْ فِيهَا بِأُمِّ الْقُرْآنِ، فَهِيَ خِدَاجٌ - ثَلَاثًا - غَيْرُ تَمَامٍ».

जसले बिना सूरः फ़ातिहा नमाज़ पढ्यो, त्यो नमाज़ अधुरो छ। तीन पटक नबी (सल्लल्लाहु अलैहि वसल्लम) ले भन्नुभयो।

अबू हुरैरासित भनियो :

(إِنَّا نَكُوْنُ وَرَآءَ الإِمَامِ)

"इमामको पछाडी पनि हामी नमाज़ पढ्दछौं"

त्यसबेला हामी के गरौं ? अबु हुरैराले भन्नुभयो :

(اِقْرَأْ بِهَا فِيْ نَفْسِكَ)

'इमामको पछाडि तिमी सूर: फ़ातिहा आफ्नो मनमा पढ ।' (सहीह मुस्लिम) उपर्युक्त दुबै हदीसहरुबाट स्पष्ट भइहाल्यो, जस्तो कि कुर्आन मजीदमा छ :

﴿وَإِذَا قُرِئَ الْقُرْآنُ فَاسْتَمِعُوا لَهُ وَأَنصِتُوا﴾

"जब कुर्आन पढिन्छ तब सुन र चुप रह ।"

(अल अअ्राफ़, २०४)

तथा हदीस «وَإِذَا قَرَأَ فَأَنصِتُوا» (यदि सहीह छ) 'जब इमाम पढ्छ त्यतिखेर चुप रह' को अभिप्राय यो हो जहरी नमाज़हरुमा मुक्तदी सूर: फ़ातिहा बाहेक शेष क़िराअत (पाठन) चुप रहेर सुनोस्, इमामको साथमा न पढोस् । अथवा इमाम सूर: फ़ातिहाका आयतहरु रोकी-रोकी पढोस् ताकि मुक्तदी पनि सहीह हदीसहरुका अनुसार सूर: फ़ातिहा पढ्न सकोस्, अथवा इमाम सूर: फ़ातिहा पछि यति बेरसम्म रुकोस् कि मुक्तदीले पनि सूर: फ़ातिहा पढि हालोस् । यस प्रकार आयत तथा हदीसहरुमा الحمد لله कुनै प्रतिकूलाता हुँदैन, दुबैको पालना भइहाल्छ, जबकि सूर: फ़ातिहाबाट रोक्नाले यो कुरा सिद्ध हुन्छ कि कुर्आन र सहीह हदीसहरुमा प्रतिकूलता छ । तथा दुबैमध्ये एउटाको पालना हुन सक्तछ, एउटै समयमा दुबैको पालना संभव छैन । यस विषयमा विवरणको लागि हेर्नुस्,'तहक़ीकुल कलाम',संकलन मौलाना अब्दुर्रहमान मुबारकपुरी, 'तौजीहुल कलाम' मौलाना इरशादुल हक असरी आदि । तथा हेर्नुस् सूर: आ्राफ आयत नं. २०४ को भाष्य ।

[२] यो सूर: मक्की हो । मक्की वा मदनीको अभिप्राय के हो भने जुन सूरतहरु हिजरत (१३ नबूवत) भन्दा पहिला अवतरित भए ती मक्की हुन्, चाहे तिनको अवतरण मक्कामा भयो अथवा त्यसको आस-पासमा । मदनी ती सूरतहरु हुन् जुनकि हिज़रत पश्चात अवतरित भएका हुन् चाहे मदीना अथवा त्यसका सीमावर्ती क्षेत्रहरुमा अवतरित भएका हुन् अथवा तिनीबाट टाढा । यहाँ सम्मकि मक्का तथा त्यसको आस पासमा नै किन न अवतरित भएका हुन् ।

[३] بسم الله को विषयमा मतभेद छ कि यो प्रत्येक सूर:को आयत हो अथवा प्रत्येक सूर:को आयतको अंश अथवा सूर: फ़ातिहाको एउटा आयात हो अथवा कुनै पनि सूर:को स्थायी आयत होइन । यसलाई मात्र प्रत्येक सूर:लाई छुट्याउनको निम्ति सूर:हरुको आरम्भमा लेखिन्छ ।

मक्का तथा कूफ़ाका क़ारीहरुले यसलाई सूरः फ़ातिहा सहित प्रत्येक सूरःको आयत मानेका छन् । जबकि मदीना, बसरा तथा शामका क़ारीहरुले यसलाई कुनै पनि आयतको सूरत मानेका छैनन्, सूरः नमल आयत ३० बाहेक, जसमा सर्वसम्मतिले बिस्मिल्लाहलाई بسم الله त्यसको अंश मानिएको छ । यसैप्रकार जहरी नमाज़हरुमा यसलाई उच्च स्वरले पढ्ने समबन्धमा पनि मतभेद छ । केही यसलाई उच्च स्वरमा पढ्ने कुरोलाई मान्दछन् तथा केही मसिनो स्वरमा । (फ़तहुल क़दीर) ।धेरै जसो विद्वानहरुले सानो आवाजमा पढ्ने कुरालाई प्रधानता दिएका छन्, तैपनि उच्च स्वरमा पढ्नु पनि उचित (जायज़) छ ।

[४] बिस्मिल्लाह بسم الله को आरम्भमा أقرأ अक्रओ अथवा أبدأ अबदा अथवा أتلو अतलु लुप्त छ अर्थात् अल्लाहको नामबाट पढ्दछु अथवा आरम्भ गर्दछु अथवा पाठ गर्दछु, प्रत्येक महत्वपुर्ण काम गर्ने बेलामा بسم الله बिस्मिल्लाह पढ्न माथि जोड दिइएको छ । यसकारण आदेश दिइयो कि खानु, वद्य, वजु तथा सम्भोग गर्नुभन्दा पहिले बिसमिल्लाह पढ, तैपनि पवित्र कुरआन पढ्ने समयमा औजुबिल्लाह मिनश्शैतानिर्ररजीम أعوذ بالله من الشيطان الرجيم पढ्नु अनिवार्य छ ।

﴿ فَإِذَا قَرَأْتَ الْقُرْآنَ فَاسْتَعِذْ بِاللَّهِ مِنَ الشَّيْطَانِ الرَّجِيمِ ﴾

"पवित्र कुरआन पढ्न थाल्दा धिक्कृत शैतानदेखि अल्लाहको शरण माँग ।"(*अन्नहल, ९६*)

[५] अल्हमदु الحمد मा ال (अल) 'सर्व' अथवा विशेषको अर्थमा छ, अर्थात् सम्पूर्ण प्रशंसाहरु अल्लाहका लागि छन् अथवा त्यसैको लागि विशेष छन्, किनकि वास्तवमा प्रशंसाको पात्र तथा योग्य मात्र अल्लाह तआला नै छ । कसैमा कुनै राम्रो गुण एवं अर्हता छ भने, त्यो पनि अल्लाहले नै सृष्टि गरेको छ । अतः स्तुति तथा प्रशंसाको पात्र पनि त्यही नै छ । अल्लाह (الله), यो अल्लाहको बाचक संज्ञा हो । यसको प्रयोग अरु कसैको लागि बैध छैन । الحمد لله 'अल्हमदुलिल्लाहे' यो कृतज्ञता प्रकट गर्ने शब्द हो । यसको हदीसहरुमा बडो प्रधानता वर्णन गरिएको छ, एक हदीसमा لا إله إلا الله (ला इलाहा इल्लल्लाहा) लाई सर्वोत्तम स्मरण तथा الحمد لله (अल्हमदुलिल्लाह) लाई सर्वोत्तम प्रार्थना भनिएको छ । (*तिर्मिजी, नसाई आदि*) । सहीह मुस्लिम तथा नसाईको हदीसमा छ । الحمد لله تملأ الميزان - الحمد मीज़ान (तुला) लाई भरिदिन्छ । यसकारण एक हदीसमा वर्णन छ कि अल्लाह यसलाई रुचाउँछ कि प्रत्येक खाने तथा पिउने कुरामा उपासकले अल्लाहको हम्द (कृतज्ञता) प्रकट गरोस् ।

[६] رب (रब), अल्लाहका शुभ-नामहरु मध्ये एउटा नाम हो । यसको अर्थ हो, प्रत्येक वस्तुको सृष्टि गरी त्यसका आवश्यकताहरुलाई सुलभ गराउनेवाला तथा त्यसलाई पूर्णतासम्म पुऱ्याउनेवाला । यसको प्रयोग अरु कसैको लागि वैध (जायज़) छैन । عالمين आलमीन عالم आलम (लोक) को बहुबचन हो, त्यसो त सम्पूर्ण सृष्टिको संयोगलाई आलम भनिन्छ, यसकारण यसको बहुबचन ल्याइँदैन, किन्तु त्यसको पूर्ण पालनकर्ता हुने कुरोलाई प्रकाशित गर्नको निम्ति, 'आलम' को पनि बहुवचन

प्रयोग गरिएको छ, जसबाट अभिप्रेत सृष्टिका अलग-अलग जातिहरु छन्, जस्तो जिन्नको आलम, मानव जातिको आलम, फरिश्ताहरुको आलम, जीव-जन्तुको आलम; पंक्षीहरुको आलम आदि। यी सबैका आवश्यकताहरु एक-अर्कासित भिन्न छन्, किन्तु رب العالمين (समस्त जगत्‌को प्रभु) सबैका आवश्यकताहरु, उनीहरुको स्थिति, स्थान, उनीहरुको प्रकृति तथा शरीरको अनुसार उपलब्ध गराउँछ ।

[७] رحمن (*रहमान*) फअ्‌लानको आधार (ओज़न) तथा رحيم (*रहीम*) फईलको ओज़नमा छ, दुबै अत्युक्तिका रुप हुन् । यी दुबैमा अधिकता तथा नित्यताको अर्थ पाइन्छ, अर्थात् अल्लाह तआ़ला अति दयानिधि छ । त्यसको यो गुण त्यसका अन्य शुभ गुणहरु जस्तै नित्य छ । केही विद्वानहरुको भनाई छ कि रहमानमा, रहीमको अपेक्षा अधिक (धेरै) अत्युक्ति छ । यसैकारण (रहमानुद्‌दुनिया वल आख़िरा) رحمن الدنيا والآخرة भनिन्छ अर्थात् संसार र अन्तिम दिन दुबैको रहमान संसारमा उसको दया सर्वसाधारणको लागि छ, जसबाट विना विशेषता काफ़िर तथा मुसलमान सबै लाभान्वित भइराखेका छन् । तथा परलोकमा त्यो मात्रै रहीम हुनेछ, अर्थात् त्यसको दया मात्रै ईमानवालाहरुको लागि विशेष हुनेछ ।

[८] संसारमा पनि यद्यपि कर्म-दण्डको क्रम एक सीमा सम्म प्रचलित रहन्छ तैपनि यसको पूर्ण अविभीव परलोकमा हुनेछ तथा अल्लाह तआ़लाले प्रत्येकलाई त्यसको राम्रो तथा नराम्रो कर्मको पूर्ण पुरस्कार अथवा दण्ड दिनेछ । यसैप्रकार संसारमा कैयन् मानिसहरुको पासमा साधनहरुका आधीन अधिकार हुन्छन् तर परलोकमा सबै अधिकारको स्वामी मात्र तथा मात्र परमेश्वर (अल्लाह तआ़ला) नै हुनेछ । अल्लाहले त्यस दिन भन्नेछ : لمن الملك اليوم (आज कसको राज्य छ ?) अनि त्यसैले उत्तर दिनेछ لله الواحد القهار (केवल एक प्रभुत्वशाली अल्लाहको)

﴿ يَوْمَ لَا تَمْلِكُ نَفْسٌ لِّنَفْسٍ شَيْـًٔا وَالْأَمْرُ يَوْمَئِذٍ لِّلَّهِ ﴾

"त्यस दिन कुनै व्यक्ति कसैको लागि अधिका.र प्राप्त हुने छैन, सबै कुराहरु अल्लाहका हाथमा हुनेछन् ।" *(अल इन्फतार)*

[९] इबादतको अर्थ हो, कसैको प्रसन्नताको लागि अति विनम्रता, विवशता तथा विनयको प्रदर्शन, तथा इब्ने कसीरको कथनानुसार धर्ममा पूर्ण-प्रेम, विनम्रता तथा भयको संग्रहको नाम हो अर्थात् जो संग प्रेम पनि होस् तथा त्यसको शक्तिको अगाडि लाचारी तथा विवशताको प्रदर्शन पनि, तथा साधनहरु अथवा अप्रत्यक्ष साधनबारे त्यसको पकडको भय पनि होस् । सोझो वाक्य نعبدك و نستعينك (हामी तिम्रो आराधना गर्दछौं तथा तिमीसित सहायता माँगदछौं) किन्तु अल्लाहले यहाँ दोस्रो कारकलाई क्रियाभन्दा पहिले गरेर ﴿ إِيَّاكَ نَعْبُدُ وَإِيَّاكَ نَسْتَعِينُ ﴾ आदेश गर्‍यो । उद्देश्य विशेषता पैदा गर्नु हो, अर्थात् हामी तिम्रै उपासना गर्दछौं तथा तिमीसित नै सहायता चाहन्छौं । आराधना अल्लाह बाहेक कुनै अर्कोको वैध छैन

न सहायता नै कोहीसँग माग्नु जायज (मान्य) छ । यी शब्दहरुबाट शिर्कको ढोका बन्द गरिदिइएको छ, तर जसको हृदयमा शिर्कको रोग पसिसकेको छ, त्यो बिना साधन तथा साधना हानि सहायता चाहनुको अन्तरलाई अन्देखि गरेर जनतालाई भ्रममा पारिदिन्छन् तथा भन्दछन्, हेर हामी रोगी हुँदा डाक्टरको सहायता लिन्छौं, पत्नीसित सहायता माँग्दछौं, ड्राइवर (चालक) तथा अन्य व्यक्तिहरुबाट सहायता लिन्छौं । यसप्रकार उनीहरु यो विश्वास दिलाउँछन् कि अल्लाहबाहेक अरुको सहायता माँग्नु बैध छ । हुन त साधना, हानि एक-अर्कासित सहायता चाहनु र गर्नु शिर्क होइन । यो त अल्लाहले बनाएको व्यवस्था हो, जसमा सारा काम प्रत्यक्ष साधनहरुका अनुकुल नै हुन्छन् । यहाँसम्मकि अम्बिया (नबीहरु) पनि मानिसहरुको सहायता प्राप्त गर्दछन्, ईशदूत ईसा (अलैहिस्सलाम) ले भन्नुभयो :

﴿مَنْ أَنصَارِىٓ إِلَى ٱللَّهِ﴾

"अल्लाहको धर्मको निम्ति को मेरो सहायक छ ?" *(अस् सफ्फ)*

तथा अल्लाह तआ़लाले ईमानवालासित भन्नुभयो :

﴿وَتَعَاوَنُوا۟ عَلَى ٱلْبِرِّ وَٱلتَّقْوَىٰ﴾

"पुण्य तथा संयमका कामहरुमा एक-अर्कालाई सहायता गर ।"

*(अल-मायेदा, २)*

स्पष्ट छ कि यो परस्पर सहायता न निषेध छ न शिर्क बरु अभीष्ट एवं प्रशंसनीय छ । यसको पारिभाषित शिर्कसित के सम्बन्ध ? शिर्क त यो हो कि यस्तो व्यक्तिसित सहायता माँगियोस् जो देखापर्ने साधनहरुलाई दृष्टिगत गर्दा सहायता गर्न सक्दैन जस्तो कुनै मरेकालाई सहायताको लागि पुकार्नु, त्यसलाई दु:खहारी तथा कार्यक्षम सम्झनु, त्यसलाई हानिकारक तथा लाभदायक मान्नु, टाढा तथा समीपस्थ प्रत्येकको गुहार सुन्ने क्षमतासित युक्त स्वीकार गर्नु । यसको नाम हो बिना (उपरो) साधनहरुद्वारा सहायता चाहनु, तथा जस्तो ईश्वरीय गुणहरुसित युक्त मान्नु, यसैको नाम शिर्क हो जुन अवलिया (धर्मात्माहरुको) प्रेमको नाममा मुसलमान देशहरुमा व्याप्त छ । أعاذنا الله منه

# तौहीदका तीन भेद

यस अवसरमा तौहीदको तीन प्रकारको पनि संक्षिप्त बर्णन गर्नु उचित देखिन्छ। यी भेद हुन् : (क) तौहीद रुबूबियत (ख) तौहीद उलूहियत (ग) तौहीद अस्मा व सिफात

(क) – ***"तौहीद रुबूबियत"*** को अभिप्राय यो हो कि यस विश्वको विधाता, स्वामी, अन्नदाता तथा ब्यवस्थापक मात्र अल्लाह हो। यस तौहीद (एकेश्वरवाद) लाई नास्तिक, अनिश्वरवादीहरू बाहेक सबै मान्दछन्। यहाँ सम्मकि मिश्रणवादी (मुश्रिकीन) पनि यसलाई स्वीकार गर्दछन् तथा भनिराखेका छन्, जस्तो कि पवित्र कुरआनले बहुदेववादीहरुले स्वीकार गरेको वर्णन यसरी गरेको छ :

﴿ قُلْ مَن يَرْزُقُكُم مِّنَ السَّمَاءِ وَالْأَرْضِ أَمَّن يَمْلِكُ السَّمْعَ وَالْأَبْصَارَ وَمَن يُخْرِجُ الْحَيَّ مِنَ الْمَيِّتِ وَيُخْرِجُ الْمَيِّتَ مِنَ الْحَيِّ وَمَن يُدَبِّرُ الْأَمْرَ ۚ فَسَيَقُولُونَ اللَّهُ ۚ فَقُلْ أَفَلَا تَتَّقُونَ ﴾

हे (पैग़म्बर !) यिनीहरुसित प्रश्न गर्नुस् कि तिमीलाई आकाश र धर्तीमा जीविका कसले प्रदान गर्दछ अथवा (तिम्रा) कान र आँखाहरुको स्वामी को हो तथा निर्जीवबाट जीव एवं जीवबाट निर्जीवलाई कसले सृष्टि गर्दछ तथा सांसारिक कार्यहरुको ब्यवस्था कसले गर्दछ ? तुरुन्त भनिदिनेछन् कि अल्लाह। (अर्थात्) यी सबैको कर्ता अल्लाह हो। *(सूरः यूनुस-३१)*

अन्य ठाउँमा अल्लाहको आदेश छ :

﴿ وَلَئِن سَأَلْتَهُم مَّنْ خَلَقَ السَّمٰوَاتِ وَالْأَرْضَ لَيَقُولُنَّ اللَّهُ ﴾

"यदि तपाईं उनीहरुसित प्रश्न गर्नुहुन्छ कि आकाश तथा धर्तीको रचयिता को हो ? त अवश्य भन्नेछन् कि अल्लाह।" *(अज् जुमर -३८)*

एउटा अर्को ठाउँमा अल्लाहको कथन छ :

﴿ قُل لِّمَنِ الْأَرْضُ وَمَن فِيهَا إِن كُنتُمْ تَعْلَمُونَ ﴾

"यदि तपाईंले उनीहरुसित प्रश्न गर्नुहुन्छ कि धर्ती तथा धर्तीमा जे-जति छ, यी सबै कसका हुन् ?"

﴿ قُلْ مَن رَّبُّ السَّمٰوَاتِ السَّبْعِ وَرَبُّ الْعَرْشِ الْعَظِيمِ ﴾

"सातवटै आकाश तथा महासिंहासन (अर्श) को स्वामी को हो ?"

﴿قُلْ مَنْ ۢبِيَدِهٖ مَلَكُوْتُ كُلِّ شَيْءٍ وَّهُوَ يُجِيْرُ وَلَا يُجَارُ عَلَيْهِ اِنْ كُنْتُمْ تَعْلَمُوْنَ﴾

"प्रत्येक वस्तुको राज्य कसको हातमा छ तथा उ सबलाई शरण दिन्छ, उसको दाँजोमा कोही शरण दिनेवाला छैन ।"

﴿سَيَقُوْلُوْنَ لِلّٰهِ قُلْ فَاَنّٰى تُسْحَرُوْنَ﴾

"ती सबैको उत्तरमा यही भन्ने छन् कि अल्लाह अर्थात् यी सबै कार्य अल्लाहकै हुन् ।" (अल-मूमिनून, ८४-८९) आदि आयतहरु ।

(ख)- ***"तौहीद उलूहियत"*** को अभिप्राय यो हो कि उपासनाको योग्य सबै प्रकारले मात्र अल्लाह तआला हो, तथा इबादत (उपासना) प्रत्येक त्यो कार्य हो जुनकि कुनै विशेष व्यक्तिलाई प्रसन्न गर्न अथवा त्यसको अप्रसन्नताको भयले गरिन्छ । यसमा नमाज़, रोजा़ (ब्रत), हज़, जका़त मात्र यही उपासना होइन बरु कुनै व्यक्ति विशेषसँग प्रार्थना विनय गर्नु, उसको नाममा प्रसाद तथा अन्य भेंट चढाउनु, उसको अगाडी हाथ बाँधेर उभिनु, त्यसको परिक्रमा गर्नु, उसित आशा, भय गर्नु आदि पनि उपासना हो । तौहीद उलूहियत यो हो कि ती सबै कार्य अल्लाहकै लागि गरियोस् । (परन्तु प्रकट साधनहरुका अनुसार जीवित मानिसहरुसित लाभ अथवा भय, तौहीदको विपरीत छैन ।) कब्र (समाधि) को पूजामा तत्पर साधारण तथा विशेष मानिसहरु यस तौहीद उलूहियतमा शिर्क गर्दछन् तथा उपरोक्त उपासनाहरु कैयौं प्रकारले उनीहरु कब्रमा गाडिएका मानिस तथा मृत धर्मात्माहरुको लागि पनि गर्दछन् ।

(ग) ***"तौहीद अस्मा व सिफ़ात"*** को अभिप्राय यो हो कि अल्लाहका जुन संज्ञा विशेष कुरआन तथा हदीसमा बर्णित भएका छन्, उनीहरुलाई बिना कष्ट, कल्पना तथा हेरफेर (परिवर्तन) नगरी स्वीकार गरुन्, तथा त्यो गुण त्यस रुपमा कसैमा नमानून्, जस्तो उसको गुण परोक्षको ज्ञान हो अथवा त्यो टाढा र समीपबाट प्रत्येकको गुहार सुन्दछ । विश्वमा प्रत्येक रुपले अधिकार राख्दछ, यस अथवा यसप्रकारका अन्य ईश्वरीय गुणहरुमध्ये कुनै पनि गुणमा अल्लाहको अतिरिक्त कुनै नबी, वली अथवा, कुनै पनि व्यक्तिलाई सम्मिलित नगर्नु, यदि यस्तो गरिन्छ भने शिर्क हुनेछ । खेदको कुरा छ कि कब्रहरु (चिहान) का पुजारीहरुमा यो शिर्क साधारण छ । उनीहरुले अल्लाहका उपरोक्त गुणहरुमा पनि धेरै जसो भक्तहरुमा पनि सम्मिलित गरिसकेका छन् ।

१० هداية (हिदायत) का कैयन् अर्थ छन् । मार्ग देखाउनु, मार्गमा हिंडाउनु, लक्ष्यसम्म पुर्‍याइदिनु, यसलाई अरबीमा इरशाद, तौफीक, इलहाम तथा दलालतद्वारा ब्यांजित गरिन्छ, अर्थात् हामीलाई संमार्ग दर्शाइदेउ । यसमा हिंड्ने तौफीक़ देउ, यसमा अडिग गरिदेउ ताकि हामीलाई तिम्रो प्रसन्नता प्राप्त भइहालोस् । यो सोझो मार्ग मात्र बुद्धिले प्राप्त हुन सक्दैन । यो सोझो मार्ग त्यही "इस्लाम" हो जसलाई नबी (सल्लल्लाहु अलैहि वसल्लम) ले संसार सामु प्रस्तुत गर्नुभयो, तथा अब जुनकि कुरआन तथा सहीह हदीसमा सुरक्षित छ ।

११ यो صراط مستقيم (सोझो मार्ग) को व्याख्या हो कि सोझो मार्ग त्यो हो जसमा ती मानिसहरु हिंडे, जसमाथि तिम्रो अनुकम्पा भयो । यो منعم عليه समूह हो अम्बिया (सन्देष्टाहरु), शहीद, सिद्दीक (सत्यवान) तथा (महानुभावहरु) को जस्तो कि सूर: निसामा छ ।

﴿وَمَن يُطِعِ اللَّهَ وَالرَّسُولَ فَأُولَٰئِكَ مَعَ الَّذِينَ أَنْعَمَ اللَّهُ عَلَيْهِم مِّنَ النَّبِيِّينَ وَالصِّدِّيقِينَ وَالشُّهَدَاءِ وَالصَّالِحِينَ وَحَسُنَ أُولَٰئِكَ رَفِيقًا﴾

"तथा जो अल्लाह तथा त्यसका रसूलको आज्ञापालन गर्दछन्, उनीहरु (कयामतका दिन) ती व्यक्तिहरुको साथमा हुन्छन् जसमाथि अल्लाहले उपकार गऱ्यो, अर्थात् अम्बिया, सिद्धिक, शहीद, तथा सदाचारीहरुको साथ तथा यिनीहरुको संगत अति उत्तम छ ।" *(अन्निसाअ, ६९)*

यस आयतमा स्पष्ट गरिसकिएको छ कि पुरस्कृत व्यक्तिहरुको यो मार्ग अल्लाह तथा रसूलको आज्ञापालनको मार्ग हो, न कि कुनै अरु मार्ग ।

१२ केही हदीसहरुबाट प्रमाणित छ कि مغضوب عليهم (जसमाथि अल्लाहको प्रकोप आइपऱ्यो) बाट अभिप्राय यहुदी हुन् तथा ضالين (पथभ्रष्ट) बाट तात्पर्य नसारा (इसाई) हुन् । इब्ने अबू हातिम भन्नुहुन्छ कि भाष्यकारहरुमा यसबारे कुनै मतभेद छैन । لا اعلم خلافا بين المفسرين في تفسير المغضوب عليهم باليهود والضالين بالنصارى (फतहुल कदीर) । अत: सोझो मार्गमा अग्रसर भइराखेकालाई आवश्यक छ कि उनीहरु यहुदी तथा इसाईहरुको पथभ्रष्टतावाट वचेर रहुन् । यहुदको ठूलो पथभ्रष्टता यो थियो कि उनीहरु जानिबुझी सोझो मार्गमा हिंड्दैनथे अल्लाहका आयतहरुमा परिवर्तन गर्न तथा छल गर्नबाट कुनै संकोच गर्दैनथे । आदरणीय उजैरलाई अल्लाहका पुत्र भने, आफ्ना धर्मचारी तथा विद्वानहरुलाई हलाल तथा हराम (वैध-अवैध) गर्ने अधिकारी ठान्दथे । इसाईहरुको ठूलो दोष यो थियो कि ईशदूत ईसाको विषयमा अति गरे तथा उनलाई अल्लाहको पुत्र, तीनमा तेस्रो बनाइदिए । खेदको विषय छ कि मुसलमानहरुमा पनि यो पथ-भ्रष्टता व्याप्त छ, यसैकारण उनीहरु संसारमा अपमानित तथा निरादरका पात्र छन् । अल्लाह तआलाले उनीहरुलाई पथ-भ्रष्टताको खाडलबाट झिकी उद्धार गरुन् । ताकि निरादर तथा पतनको वढ्दो छायाँबाठ सुरक्षित रहन सकून् ।

सूर: फातिहाको अन्त्यमा आमीन् آمين भन्ने कुरोमा नबी (सल्लल्लाहु अलैहि वसल्लम) ले वडो जोड दिनुभएको छ तथा त्यसको प्रतिष्ठाको बर्णन गर्नु भएको छ । अत: इमाम तथा मुक्तदी दुवैले آمين (आमीन्) भन्नु पर्छ । नबी सल्लल्लाहु अलैहि वसल्लम जहरी (उच्च स्वरको) नमाजहरूमा उच्च स्वरले (आमीन) भन्ने गर्नुहुन्थ्यो तथा सहावा पनि यहाँसम्मकि मस्जिद गुञ्जयमान हुन्थे । (इब्ने माजा, इब्ने कसीर) यसकारण उच्चस्वरमा آمين (आमीन्) भन्नु सुन्नत तथा सहाबाको कर्म रहिआएको छ । آمين (आमीन्) का बिभिन्न अर्थ वर्णन गरिएका छन् : كذالك فليكن (यस्तै होस्,) لا تخيب رجاءنا हामीलाई विफल नगर्नु तथा اللهم استجب لنا अल्लाह हाम्रो प्रार्थना स्वीकार गरिहाल ।

# सूरतुल बक़र:- २

سُوْرَةُ الْبَقَرَةِ

(सूर: बक़र:[1] मदीनामा अवतरित भएको, यसमा दुई सय छयासी आयतहरू र चालीस रुकूअ छन् ।)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाह बडो दयावान अति करुणामयीको नामबाट प्रारम्भ गर्दछु ।

الٓمّٓ ۚ﴿۱﴾

(१) अलिफ. लाम. मीम. ।[2]

ذٰلِكَ الْكِتٰبُ لَا رَيْبَ ۛ فِيْهِ ۛ هُدًى لِّلْمُتَّقِيْنَ ﴿۲﴾

(२) यस किताब (अल्लाहको किताब हुने बारे) मा कुनै संदेह छैन[3], पवित्र व्यक्तिहरूलाई मार्गदर्शन गर्ने (किताब) हो ।[4]

---

[1] यस सूर:मा अगाडी गएर गाईको घटनाको वर्णन भएको छ, यसकारण यसलाई गाईको घटनावाली सूर: भनिन्छ । अरबीमा "बक़र:" गाईलाई भनिन्छ । हदीसमा यसको विशेष महत्व छ । यो पनि वर्णित गरिएको छ कि जुन घरमा यो पढिन्छ, त्यसमा शैतान प्रवेश गर्दैन पवित्र कथन छ ।

(لَا تَجْعَلُوْا بُيُوتَكُمْ قُبُوْرًا، فَإِنَّ الْبَيْتَ الَّذِيْ تُقْرَأُ فِيْهِ سُوْرَةُ الْبَقَرَةِ لَا يَدْخُلُهُ الشَّيْطَانُ)

अवतरणको आधारमा यो मदीनाका प्राथमिक समयका सूरःतहरूमा पर्दछ, तर यसका केही आयतहरू 'हज्जतुल-विदाअ' (रसूल अल्लाह सल्लल्लाहु अलैहि वसल्लमद्वारा गरिएको हज्ज जुनकि उहाँले आफ्नो जीवनको अन्तिम वर्षमा सम्पन्न गर्नुभयो) को समयमा अवतरित भए । इस्लाम धर्मका केही ज्ञानीहरूका अनुसार यसमा एक हज़ार सन्देश, एक हज़ार नियम र एक हज़ार मनहियात (निषेधाज्ञ) छन् । (इब्ने क़सीरद्वारा सहीह मुस्लिम आदिबाट उद्धृत) (इब्ने क़सीर)

[2] यिनलाई अरबीमा 'हरफ़े मुक़त्तआत' (अलग-अलग अक्षर) भनिन्छ । अर्थात् अलग-अलग पढिने अक्षर । यिनको अर्थको विषयमा कुनै प्रमाणित कथन छैन । परन्तु नबी (सल्लल्लाहु अलैहि वसल्लमले यो कुरा अवश्य भन्नु भयो कि म भन्दिन कि الٓمّٓ एक अक्षर हो, बरु **'अलिफ'** एक अक्षर **'लाम'** एक अक्षर र **'मीम'** एक अक्षर हो र हरेक अक्षरमा, एक नेकी र प्रत्येक नेकी (पुण्य) को फल दस गुना छ । (तिर्मिज़ी एवं अल-हाकिम, फ़तहुल क़दीर) ।

ٱلَّذِينَ يُؤْمِنُونَ بِٱلْغَيْبِ وَيُقِيمُونَ ٱلصَّلَوٰةَ وَمِمَّا رَزَقْنَٰهُمْ يُنفِقُونَ ۝٣

(३) जुन मानिसहरू गैब (परोक्ष) मा विश्वास गर्दछन् ।[१] र नमाज़लाई स्थापित गर्दछन्[२] एवं हामीद्वारा प्रदान गरिएका (माल) मध्येबाट खर्च गर्दछन् ।[३]

[३]यसको उद्‌गम स्थल अल्लाहद्वारा हुने कुरोमा कुनै प्रकारको सन्देह छैन जस्तो कि अन्य स्थानमा कुरआनमा छ ﴿تَنزِيلُ الْكِتَابِ لَا رَيْبَ فِيهِ مِن رَّبِّ الْعَالَمِينَ﴾ (अलिफ.लाम.मीम. सजद:) केही आलिमहरुले (इस्लाम धर्मका ज्ञानी गुरुहरु) भनेका छन् कि यो सन्देश नकारात्मक छ (यसमा सन्देह नगर) यसका अतिरिक्त जुन घटनाहरु वर्णन गरिएका छन्, उनीहरूको सत्यापनमा, जुन नियम वा सिद्धान्त वर्णन गरिएका छन्, तिनीहरूबाट मानवताको सफलता र मोक्ष सम्बन्धित हुनुमा र जुन सिद्धान्त (तौहीद तथा रिसालत एवं परलोकको विषयमा) को वर्णन गरिएको छ, तिनीहरू सत्य हुने कुरोमा कुनै सन्देह छैन ।

[४]त्यसो त यो अन्तिम पवित्र ईश-पुस्तक सम्पूर्ण मानव जातिको निम्ति शुभ-सन्देश एवं मार्गदर्शन गर्नको लागि नै अवतरित भएको हो, तर यस पवित्र स्रोतबाट ती मानिसहरू नै लाभान्वित हुन्छन् जो यस अमृतको खोजी र अल्लाहको भयले परिपूर्ण हुनेछन् जसको हृदयमा मरणोपरान्त अल्लाह समक्ष उपस्थित भई आफ्ना कर्महरूको उत्तरदायित्वको विश्वास, र यसको मात्र चिन्ता नै होइन, त्यसमा सत्य मार्गको खोज एवं पथ-भ्रष्टताबाट बच्ने प्रयास हुनेछैन, त त्यसलाई सन्मार्ग कहाँबाट र किन प्राप्त हुनसक्ला ?

[१]गैबको अर्थ ती कुराहरू हुन् जसका निदान मस्तिष्क एवं बुद्धिद्वारा हुँदैनन् । जस्तो अल्लाह तआला वह्‌यी (ईश्वरीय प्रकाशनहरू) इलाही, स्वर्ग, नरक, मलायेका (फरिश्ता, ईशदूत), कब्रको यातना, हश्र हुनु आदि । यसबाट प्रष्ट भयो कि अल्लाह र रसूलद्वारा भनिएका सूचनाहरू बुद्धि, आभासका अतिरिक्त माथि विश्वास गर्नु ईमानको भाग हो र यसलाई नकार्नु कुफ्र र मार्ग-विचलन हो ।

[२]नमाज़ स्थापित गर्नुको भावार्थ यो हो कि नियमित रुपले 'सुन्नत-ए-नबवी' (नबी सल्लल्लाहु अलैहि वसल्लमको सुन्नत) अनुसार नमाज़ पढ्नु, नत्र नमाज़ त मुनाफ़िक (जो बाहिरबाट मुसलमान र भित्रबाट अन्य केही) पनि पढ्ने गर्दथे ।

[३]إنفاق को शब्द मुख्यरुपले दानको निम्ति प्रयुक्त हुन्छ जुनकि वाजिब (आवश्यक) र नफ़िल (ऐच्छिक) दुबै थरीका दानको निम्ति हुन्छ । ईमानवालाहरू आफ्नो शक्ति अनुसार दुबै प्रकारका दान दिनमा ढीला-सुस्ती गर्दैनन्, बरु आमा-बाबु तथा सन्तान एवं परिवारमाथि उचितरुपले व्यय गर्नु पनि यसमा सम्मिलित छ र यो पुण्य र फल प्राप्तिको कारण बन्दछ ।

(४) र जो विश्वास गर्दछन् त्यसलाई जे तपाईंतिर अवतरित गरियो र जे तपाई भन्दा पहिला अवतरित गरिएको छ[1] र तिनीहरू आखिरतमा पनि विश्वास गर्दछन् ।

وَالَّذِيْنَ يُؤْمِنُوْنَ بِمَآ اُنْزِلَ اِلَيْكَ وَمَآ اُنْزِلَ مِنْ قَبْلِكَ ۚ وَبِالْاٰخِرَةِ هُمْ يُوْقِنُوْنَ ۝

(५) यिनै मानिसहरू हुन् जो आफ्ना प्रभुको सत्य-मार्गमा छन् र यी नै सफलता एवं मोक्ष प्राप्त गर्नेछन् ।[2]

اُولٰٓئِكَ عَلٰى هُدًى مِّنْ رَّبِّهِمْ ۙ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ۝

(६) काफ़िरहरूलाई तपाईंबाट तर्साउनु वा नतर्साउनु समान छ, यिनीहरू विश्वास गर्ने छैनन् ।[3]

اِنَّ الَّذِيْنَ كَفَرُوْا سَوَآءٌ عَلَيْهِمْ ءَاَنْذَرْتَهُمْ اَمْ لَمْ تُنْذِرْهُمْ لَا يُؤْمِنُوْنَ ۝

[1]पहिलेका किताबहरूमा विश्वास गर्नुको अर्थ यो हो कि जुन किताबहरू नबीहरूमाथि अवतरित गरिए, ती सबै सत्य हुन्, यद्यपि अहिले तिनीहरूका अनुसार कर्म गर्न सकिँदैन, अब कर्म मात्र कुर्आन र नबी सल्लल्लाहु अलैहि वसल्लमको व्याख्या, एवं हदीस अनुसार नै गरिने छ । यसबाट यो पनि विदित भयो कि वह्य एवं रिसालतको श्रृखंला मुहम्मद सल्लल्लाहु अलैहि वसल्लममा समाप्त भयो, नत्र यसमा पनि विश्वास गर्न अल्लाह तआलाले अवश्य वर्णन गर्थ्यो ।

[2]यो ती ईमानवालाहरूले फल प्राप्त गर्ने कुराको वर्णन हो, जो विश्वास गरिसकेपछि तक्वा (हृदयदेखि अल्लाहको भय), कर्म एवं शुद्ध विश्वासको प्रायोजन गर्दछन् । मात्र जिभ्रोले ईमानको घोषणालाई उपयुक्त मान्दैनन् । सफलताको तात्पर्य आखिरतमा अल्लाहलाई प्रसन्न पार्नु र उसको दया एवं मोक्ष (मग़फिरत) को प्राप्ति हो । यसको साथै धर्तीमा पनि प्रसन्नता तथा मान-सम्मान एवं सफलता प्राप्त हुन्छ भने झनै राम्रो, नत्र वास्तविक सफलता त आखिरतकै सफलता हो । यस पश्चात अल्लाह अर्को समूहको वर्णन गरिराखेको छ, जो मात्र काफ़िर होइन बरू त्यसको कुफ्र एवं अहङ्कार त्यस सीमासम्म पुगिसकेको छ, जस पश्चात त्यसलाई परोपकार एवं इस्लामलाई स्वीकार गर्ने कामना नै हुँदैन ।

[3]नबी सल्लल्लाहु अलैहि वसल्लमको ठूलो इच्छा थियो कि सबै मुसलमान होउन् र त्यसै अनुसार उहाँले प्रयत्न गर्नुहुन्थ्यो, तर अल्लाह तआलाको आदेश भयो कि ईमान उनीहरूको भाग्यमा छैन । यी केही त्यसता मानिसहरु हुन्, जसका हृदयमा छाप लागिसकेको थियो । (जस्तो अबु जहल र अबु लहब आदि) नत्र उहाँको आमन्त्रण एवं निर्देशल अनगिन्ती मानिसहरु मुसलमान भए,

خَتَمَ اللّٰهُ عَلٰى قُلُوْبِهِمْ وَعَلٰى سَمْعِهِمْ ۭ وَعَلٰٓى اَبْصَارِهِمْ غِشَاوَةٌ ۡ وَّلَهُمْ عَذَابٌ عَظِيْمٌ ۷

(७) अल्लाह तआलाले उनीहरूका हृदय एवं कानहरूमा छाप (मोहर) लगाइदिएको छ र उनीहरूका आँखामाथि पर्दा छ, र उनीहरूका लागि कठोर प्रकोप छ ।[1]

وَمِنَ النَّاسِ مَنْ يَّقُوْلُ اٰمَنَّا بِاللّٰهِ وَبِالْيَوْمِ الْاٰخِرِ

(८) र केही यस्ता छन् जो भन्दछन्, हामीले अल्लाह (परमेश्वर) एवं अन्तिम दिनमा

यहाँसम्मकि सम्पूर्ण अरब क्षेत्र इस्लामको छत्र-छायाँमा आइपुग्यो ।

[1]यहाँ उनीहरूले विश्वास नगर्नुको कारण भनिएको छ, किनकि कुफ्र एवं पाप लगातार गर्नाको कारणले उनीहरूका हृदयबाट सत्य कुरोलाई स्वीकार गर्ने शक्ति समाप्त भइसकेको छ । उनका कानहरू सत्य सुन्न तयार छैनन् र उनका आँखा सृष्टिमा फैलिएका प्रभुका निशानीहरू देख्न योग्य छैनन्, तसर्थ उनीहरू विश्वास कसरी गर्न सक्दछन् ? ईमान (विश्वास) त उनीहरूको भागमा आउँछ, जो अल्लाह तआलाद्वारा प्रदान गरिएका शक्तिको उचित प्रयोग गर्दछन्, एवं उनीद्वारा सफलता प्राप्त गर्दछन् । यसका विपरीत मानिसहरू, त त्यस हदीसको उदाहरण बन्दछन् जसमा वर्णित गरिएको छ कि "मोमिनले जब पाप गर्दछ त उसको हृदयपटलमा सानो कालो विन्दु पर्न जान्छ । यदि त्यसले पाप बापत क्षमा माँगेर पाप गर्दैन भने उसको हृदय पहिलेको जस्तै श्वेत एवं उज्जवल हुन्छ अर्थात् पापरहित हुन्छ र यदि त्यसले पाप पछि अर्को पाप गर्दैजान्छ भने त्यो कालो विन्दु फैलिएर सम्पूर्ण हृदयपटललाई ढाक्छ ।" नबी (सल्लल्लाहु अलैहि वसल्लम) ले भन्नुभयो "यही त्यो खिया हो जसलाई अल्लाह तआलाले वर्णित गरेको छ ।"

﴿كَلَّا بَلْ رَانَ عَلَىٰ قُلُوبِهِم مَّا كَانُوا يَكْسِبُونَ﴾ [المطففين : ١٤]

"अर्थात् उनीहरूका कर्मले गर्दा उनीहरूका हृदयमा खिया लागिसकेको छ ।"
(अल-मुत्फ्फेफीन-१४) (तबरी तथा फ़तहुल क़दीर)

यस स्थितिलाई कुर्आनले ختم (मोहर छाप लागिने) सित तुलना गरेको छ, जुन कि उनीहरूले लगातार गरेका कुकर्महरूको तर्कपूर्ण परिणाम हो ।

وَمَا هُم بِمُؤْمِنِينَ ۝٨

विश्वास गरेका छौं, तर वास्तवमा उनीहरू आस्थावान, ईमानवाला होइनन् ।[1]

يُخَٰدِعُونَ ٱللَّهَ وَٱلَّذِينَ ءَامَنُوٓاْ وَمَا يَخْدَعُونَ إِلَّآ أَنفُسَهُمْ وَمَا يَشْعُرُونَ ۝٩

(९) उनीहरू अल्लाह र ईमानवालाहरूलाई धोका दिराखेका छन्, तर वास्तवमा उनीहरू स्वयंलाई ढाँटिराखेका छन्, र उनलाई ज्ञान छैन ।

فِى قُلُوبِهِم مَّرَضٌ فَزَادَهُمُ ٱللَّهُ مَرَضًا ۖ وَلَهُمْ عَذَابٌ أَلِيمٌۢ بِمَا كَانُواْ يَكْذِبُونَ ۝١٠

(१०) उनीहरूको हृदयमा रोग छ, अल्लाहले उनीहरूको रोगलाई झन् बढाइ दियो,[2] र उनीहरू असत्य बोल्नुका कारण उनीहरूलाई दुखदायी यातनाहरू छन् ।

وَإِذَا قِيلَ لَهُمْ لَا تُفْسِدُواْ فِى ٱلْأَرْضِ قَالُوٓاْ إِنَّمَا نَحْنُ مُصْلِحُونَ ۝١١

(११) र जब उनीहरूसित भनिन्छ कि धर्तीमा बिगाड उत्पन्न नगर, त उत्तरमा भन्दछन् कि हामी त मात्र सुधारक हौं ।

أَلَآ إِنَّهُمْ هُمُ ٱلْمُفْسِدُونَ وَلَٰكِن لَّا يَشْعُرُونَ ۝١٢

(१२) सावधान ! वास्तवमा यिनीहरू नै बिगाड उत्पन्न गर्नेवाला हुन्,[3] तर महसूस गर्दैनन् ।

[1]यहाँबाट तेस्रो समूहका मुनाफ़िकहरूको वर्णन आरम्भ हुन्छ, जसका हृदय ईमानरहित थिए तर ईमानवालाहरूलाई धोका दिनको निम्ति मुखले ईमान प्रदर्शन गर्दथे । अल्लाह तआ़लाले भन्नुभयो कि उनीहरू न त अल्लाहलाई धोका दिन सफल हुन सक्छन् (किनकि त्यसलाई सबै कुरा थाहा छ) र न त मुसलमानहरूलाई सधैं धोका दिन सक्छन्, किनभने अल्लाह तआ़ला वह्य (प्रकाशना) द्वारा उनीहरूको छलकपटको सूचना मुसलमानहरूलाई दिने गर्दथ्यो । यसप्रकार उनीहरूको छलकपटको पूर्ण हानि उनीहरूले नै व्यहोर्नु पऱ्यो, यसरी उनीहरूले आफ्नो परलोक त बिगारे नै साथै धर्तीमा पनि अपमानित भए ।

[2]रोगबाट तात्पर्य त्यही कुफ्र एवं विध्वंसको रोग हो, जसलाई सुधारको प्रयत्न गरिएन भने बढ्दै जान्छ । यसैप्रकार झूठ बोल्नु मुनाफ़िकहरूको निशानीमा पर्छ, जसबाट जोगाउनु आवश्यक छ ।

[3]बिगाड, सुधारको विलोम हो । कुफ्र र पापबाट धर्तीमा बिगाड फैलिन्छ र अल्लाहको आज्ञा पालनबाट शान्ति प्राप्त हुन्छ । प्रत्येक युगका मुनाफ़िकहरूको यही काम रहिआएको छ कि उनीहरु पापको प्रचार गर्दछन् र प्रभुको शक्तिको

وَإِذَا قِيلَ لَهُمْ آمِنُوا كَمَا آمَنَ النَّاسُ قَالُوا أَنُؤْمِنُ كَمَا آمَنَ السُّفَهَاءُ ۗ أَلَا إِنَّهُمْ هُمُ السُّفَهَاءُ وَلَٰكِن لَّا يَعْلَمُونَ ⑬

(१३) र जब उनीहरूसित भनिन्छ कि अरुहरू (अर्थात् सहाबा) जस्तै तिमी पनि ईमानवाला भइहाल, त उत्तर दिन्छन् कि के हामी त्यस्तै विश्वास गरिहालौं जस्तो मूर्खहरूले गरिहाले छन् ।[1] सावधान ! वास्तवमा यी नै मूर्ख हुन्, तर यिनीहरू जान्दैनन् ।[2]

وَإِذَا لَقُوا الَّذِينَ آمَنُوا قَالُوا آمَنَّا وَإِذَا خَلَوْا إِلَىٰ شَيَاطِينِهِمْ قَالُوا إِنَّا مَعَكُمْ إِنَّمَا نَحْنُ مُسْتَهْزِئُونَ ⑭

(१४) र जब ईमानवालाहरूसित भेट्छन् त भन्छन् कि हामी पनि ईमानवाला हौं, र जब एकान्तमा आफ्ना ठूला-बडा (शैतानहरू) को पासमा पुग्छन् ।[3] तब भन्छन् कि हामी

सीमालाई समाप्त गर्दछन् र ठान्दछन् अथवा दावी गर्दछन् कि उनीहरू सुधार एवं उन्नतिका लागि प्रयत्न गरिराखेका छन् ।

[1]यी मुनाफ़िकहरूले ती सहाबा (رضی اللہ عنہم) लाई मूर्ख भने, जो अल्लाहको मार्गमा तन, मन, धन कुनै प्रकारको बलिदानबाट पछि हटेनन् र आजकलका मुनाफ़िक यो सिद्ध गर्न खोज्दछन् कि (نعوذ باللہ) सहाबा किराम (رضی اللہ عنہم) ईमानको धनबाट शून्य थिए । अल्लाह तआलाले प्राचीन एवं आधुनिक दुबै प्रकारका मुनाफ़िकहरूको भनाईको खण्डन गर्नु भएको छ । अल्लाहको कथन छ : कुनै महान लक्ष्यको निम्ति सांसारिक लाभको बलिदान दिनु मूर्खता होइन, पूर्ण बुद्धिमत्ता एवं फलदायक कुरा हो । सहाबा (رضی اللہ عنہم) ले यसै बुद्धिमत्ताको परिचय दिए । यसकारण उनीहरू पक्का मोमिन मात्र होइनन् बरु ईमानका लागि एउटा माप एवं कसी पनि हुन्, अब ईमान तिनीहरूकै उचित हुनेछ, जो सहाबा किराम (رضی اللہ عنہم) जस्तै ईमानवाला हुनेछन् ।

﴿فَإِنْ آمَنُوا بِمِثْلِ مَا آمَنتُم بِهِ فَقَدِ اهْتَدَوا﴾ (अल-बक़रः-१३७)

[2]कुरो प्रष्ट छ कि अस्थाई लाभको लागि स्थाई लाभ छाडिदिनु र आख़िरतको स्थाई जीवनको अपेक्षा सांसारिक क्षणिक जीवनलाई महत्व दिनु र अल्लाहलाई छाडि मनुष्यसित तर्सनु अति मूर्खता हो, जुन कि यी मुनाफ़िकहरूले गरे । यसप्रकार उनीहरू एक पूर्ण सत्यबाट अज्ञान रहे ।

[3]शैतानहरूसित तात्पर्य कुरैश र यहुदी नेता गणहरू हुन् जसका निर्देशमा उनीहरू इस्लाम र मुसलमानहरूका विरूद्ध षड्यन्त्र गर्दथे । अथवा मुनाफ़िकहरूका आफ्ना नेता ।

तिम्रा साथमा छौं, हामी त उनीहरूसित मात्र परिहास गर्दछौं ।

ٱللَّهُ يَسْتَهْزِئُ بِهِمْ وَيَمُدُّهُمْ فِى طُغْيَٰنِهِمْ يَعْمَهُونَ ⑮

(१५) अल्लाह तआला पनि उनीहरूसित परिहास गर्दछ ।[1] र उनीहरूलाई उनको धूर्तता एवं छलमा अझ बृद्धि गरिदिन्छ ।

أُو۟لَٰٓئِكَ ٱلَّذِينَ ٱشْتَرَوُا۟ ٱلضَّلَٰلَةَ بِٱلْهُدَىٰ فَمَا رَبِحَت تِّجَٰرَتُهُمْ وَمَا كَانُوا۟ مُهْتَدِينَ ⑯

(१६) यिनीहरू त्यसता मानिस हुन् जसले पथभ्रष्टतालाई मार्गदर्शनको सट्टामा किनिसकेका छन् । परन्तु यिनको व्यापार[2] न लाभकारी भयो न उनीहरूले संमार्ग प्राप्त गर्न सके ।

---

[1]"अल्लाह तआला पनि उनीहरूसित परिहास गर्दछ ।" यसको एक अर्थ यो हो कि जुनप्रकारले उनीहरू मुसलमानहरूसित परिहास र अनादरको व्यवहार एवं क्रियाकलाप गर्दछन्, अल्लाह पनि उनीहरूसित परिहास र अनादरको कुरा गर्दै अपमानित गर्दछ । यसलाई परिहाससित संबोधित गर्नु भाषाको नियम हो, अन्यथा यो वास्तवमा परिहास होइन, बरु उनीहरूका परिहासिक कर्महरूको दण्ड हो । जस्तो

﴿وَجَزَٰٓؤُا۟ سَيِّئَةٍ سَيِّئَةٌ مِّثْلُهَا﴾ [الشورى:٤٠]

"नराम्रो कुराको प्रतिफल त्यसैको समान नराम्रो हो ।" (अश-शूरा-१४)

यसमा नराम्रोको प्रतिफललाई नराम्रो भनिएको छ, यद्यपि यो नराम्रो होइन । एउटा उचित कर्म हो । यसैप्रकार ﴿يُخَٰدِعُونَ ٱللَّهَ وَهُوَ خَٰدِعُهُمْ﴾ ﴿وَمَكَرُوا۟ وَمَكَرَ ٱللَّهُ﴾ आदि आयतहरूमा छ । अर्को अर्थ हो कि प्रलयका दिन अल्लाह तआला पनि उनीसित परिहास गर्नेछ । जस्तो कि सूरः हदीदको आयत ﴿يَوْمَ يَقُولُ ٱلْمُنَٰفِقُونَ﴾ मा वर्णन छ ।

[2]यस आयतमा व्यापारको तात्पर्य सत्य-मार्गलाई छाडेर पथभ्रष्टतामा पर्नु हो, जुनकि स्पष्टरुपले हानिको सौदा हो । मुनाफ़िकहरूले निफ़ाकको रूप धारण गरी यही घाटा हुने व्यापार गरे, परन्तु यो घाटा प्रलयको घाटा हो । यो निश्चित छैन कि संसारमा उनीहरूलाई यस घाटाको ज्ञान होस् अपितु संसारमा त उनीहरूलाई यस निफ़ाक्द्वारा जुन लाभ प्राप्त हुन्थ्यो, त्यसमाथि उनीहरू निकै प्रसन्न हुने गर्दथे तथा यसैकारण उनीहरू स्वयंलाई बुद्धिमान र मुसलमानहरूलाई मूर्ख सम्झन्थे ।

مَثَلُهُمْ كَمَثَلِ الَّذِى اسْتَوْقَدَ نَارًا ۚ فَلَمَّآ اَضَآءَتْ مَا حَوْلَهٗ ذَهَبَ اللّٰهُ بِنُوْرِهِمْ وَتَرَكَهُمْ فِىْ ظُلُمٰتٍ لَّا يُبْصِرُوْنَ ۝١٧

(१७) यी मानिसहरूको उदाहरण त्यो व्यक्तिको जस्तो छ जसले आगो वाल्यो परन्तु जब आगोले त्यसको छेउछाउलाई प्रकाशमान पार्‍यो, तब अल्लाहले उनीहरूको प्रकाश खोसिदियो र उनीहरूलाई अन्धकारमा छाडिदियो जसमा केही देख्दैनन् ।[1]

صُمٌّۢ بُكْمٌ عُمْىٌ فَهُمْ لَا يَرْجِعُوْنَ ۝١٨

(१८) यिनीहरु वहिरा-लाटा एवं अन्धा छन्, अब यिनीहरू सत्मार्गमा फर्किनेवाला छैनन् ।

اَوْ كَصَيِّبٍ مِّنَ السَّمَآءِ فِيْهِ ظُلُمٰتٌ وَّرَعْدٌ وَّبَرْقٌ ۚ يَجْعَلُوْنَ اَصَابِعَهُمْ فِىْٓ اٰذَانِهِمْ مِّنَ الصَّوَاعِقِ حَذَرَ الْمَوْتِ ۗ وَاللّٰهُ مُحِيْطٌۢ بِالْكٰفِرِيْنَ ۝١٩

(१९) अथवा उनको उदाहरण वादलवाट परेको त्यस मुसलधारे पानी जस्तो रहेको छ जसमा अन्धकार, गर्जनको कारण मृत्युसित तर्सेर उनीहरू आफ्ना कानमा औंलाहरु कोच्दछन् र अल्लाह तआला काफ़िरहरूलाई घेरिराखेको छ ।

يَكَادُ الْبَرْقُ يَخْطَفُ اَبْصَارَهُمْ ۗ كُلَّمَآ اَضَآءَ لَهُمْ مَّشَوْا فِيْهِ ۙ وَاِذَآ اَظْلَمَ عَلَيْهِمْ قَامُوْا ۗ وَلَوْ شَآءَ اللّٰهُ لَذَهَبَ بِسَمْعِهِمْ وَاَبْصَارِهِمْ ۗ

(२०) लाग्छ कि विजुलीले उनीहरूका आँखाको ज्योतिलाई खोसिदिन्छ, जब उनीहरूको लागि प्रकाश गर्दछ त हिंड्न थाल्छन् तथा जब अँध्यारो गर्छ तव ठिङ्ग उभिहाल्छन् ।[2]

[1]माननीय अव्दुल्लाह विन मसऊद رضی اللہ عنہ र अन्य सहावाले यसको अर्थ यसरी वताएका छन् कि नवी सल्लल्लाहु अलैहि वसल्लम जब मदीना आउनुभयो, त्यसवेला केही मानिसहरू मुसलमान भए तर फेरि शीघ्र नै मुनाफ़िक भइहाले । उनीहरूको उदाहरण त्यो व्यक्ति जस्तो छ जो अँध्यारोमा थियो, उसले प्रकाशको लागि आगो वाल्यो, जसले वातावरण प्रकाशमान भयो र लाभकारी एवं हानिकारक वस्तुहरू उसलाई स्पष्ट भए, एक्कासि त्यो प्रकाश समाप्त भयो र त्यो पूर्व (अघि) कै अन्धकारको स्थितिमा घेरियो । यही अवस्था मुनाफ़िकहरूको थियो, उनीहरू पहिला शिर्कको अन्धकारमा थिए, मुसलमान भए, तव प्रकाशमा आए, वैध-अवैध र लाभ-हानिलाई चिने, अनि पुन: तिनीहरू कुफ्र र विखण्डनतिर फर्के । त्यस पश्चात सारा प्रकाश समाप्त भयो । (फ़तहुल कदीर)

[2]यो मुनाफ़िकहरूको एउटा अर्को समुहको वर्णन हो, जसमाथि सत्य कहिले स्पष्ट हुन्छ, कहिले उनीहरू असमंजस्य एवं र सन्देहमा पर्दछन् । उनीहरूका हृदय, संदेह असमंजस्यमा त्यस वर्षाका समान छन्, जुनकि अन्धकार (संदेह, कुफ्र, विगाड) मा पर्छ, गर्जन र चमकले उनीहरूका हृदय काम्न थाल्छन्,

إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٢٠﴾

र यदि अल्लाहले चाहेको भएमा उनीहरूका आँखा र कान खोस्न सक्थ्यो,[1] वस्तुत: अल्लाह सर्वशक्तिमान छ ।

يَا أَيُّهَا النَّاسُ اعْبُدُوا رَبَّكُمُ الَّذِي خَلَقَكُمْ وَالَّذِينَ مِن قَبْلِكُمْ لَعَلَّكُمْ تَتَّقُونَ ﴿٢١﴾

(२१) हे मानिसहरू ! आफ्नो त्यस पालनकर्ताको उपासना गर जसले तिमीलाई तथा तिमीभन्दा पूर्व मानिसहरूलाई सृष्टि गऱ्यो ताकि तिमी सदाचारी बन ।

الَّذِي جَعَلَ لَكُمُ الْأَرْضَ فِرَاشًا وَالسَّمَاءَ بِنَاءً وَأَنزَلَ مِنَ السَّمَاءِ مَاءً فَأَخْرَجَ بِهِ مِنَ الثَّمَرَاتِ رِزْقًا لَّكُمْ ۖ فَلَا تَجْعَلُوا لِلَّهِ أَندَادًا وَأَنتُمْ تَعْلَمُونَ ﴿٢٢﴾

(२२) जसले तिम्रो निम्ति धर्तीलाई ओछ्यान तथा आकाशलाई छानो बनायो, र आकाशबाट वर्षा गऱ्यो तथा त्यसबाट फल उत्पन्न गरी तिमीलाई जीविका प्रदान गऱ्यो, अत: यो थाहा हुँदाहुँदै कसैलाई अल्लाहको समवर्ती नबनाउ ।[2]

यहाँसम्मकि भयले औंलाहरू आफ्ना कानमा हाल्दछन् । परन्तु यस प्रयासले उनीहरूलाई अल्लाहको पकडबाट बचाउन सक्ने छैन, किनभने उनीहरू अल्लाहको घेराबाट उम्कन सक्दैनन् । कहिलेकाहीं सत्यका किरणहरु देखेर सत्यतिर लाग्छन्, तर जब इस्लाम तथा मुसलमानहरूमाथि कठिनाईको समय आउँछ त स्तब्ध भई उभिन्छन् । (इब्ने कसीर) मुनाफ़िकहरूको यो समूह अन्तिम समयसम्म असमंजस्य र आल-टालको शिकार भई सत्य (इस्लाम) बाट बिमुख हुनपुग्छ ।

[1]यसमा यस कुराको सतर्कतातिर संकेत छ कि यदि अल्लाहले चाहेको खण्डमा आफुले प्रदान गरेको शक्ति खोस्न सक्दछ । अत: मनुष्यहरूलाई अल्लाह तआलाको आज्ञा पालनबाट अलग्ग एवं त्यसको प्रकोप एवं न्यायबाट कहिल्यै पनि निडर हुनुहुँदैन ।

[2]सत्यमार्ग एवं पथ-भ्रष्टता अनुसार मनुष्यलाई तीन समूहमा वर्णन गरिए पश्चात अल्लाह तआला एक हुने र त्यसको उपासना (इबादत) को निमन्त्रण सबैलाई दिइराखिएको छ । आदेश छ, जब तिम्रो र तिम्रो सृष्टिको स्रष्टा अल्लाह छ, तिम्रा सम्पूर्ण आवश्यकताहरूलाई पूरा गर्ने त्यही छ, भने तिमी त्यसलाई छाडेर अरुहरूको इबादत किन गर्दछौ ? अरुहरूलाई त्यसको समवर्ती किन ठहराउँदछौं ? यदि तिमी अल्लाहको यातनाबाट बच्न चाहन्छौ भने त्यसको एउटै मार्ग छ, त्यो के हो भने अल्लाहलाई एक मान र मात्र उसैको इबादत (उपासना) गर । कुनै अर्कोलाई उसको समवर्ती (समकक्षी) बनाउने कर्म नगर ।

وَإِن كُنتُمْ فِي رَيْبٍ مِّمَّا نَزَّلْنَا عَلَىٰ عَبْدِنَا فَأْتُوا بِسُورَةٍ مِّن مِّثْلِهِ وَادْعُوا شُهَدَاءَكُم مِّن دُونِ اللَّهِ إِن كُنتُمْ صَادِقِينَ ﴿٢٣﴾

(२३) र यदि तिमीलाई त्यसमा सन्देह छ, जे हामीले आफ्नो भक्तमाथि अवतरित गरेका छौं, तथा यदि तिमी सत्यवादी हौ भने त्यो जस्तै एउटा सूर: बनाएर ल्याउ । तिमीलाई छूट छ कि अल्लाह बाहेक आफ्ना सहयोगीहरूलाई पनि बोलाउ ।[1]

فَإِن لَّمْ تَفْعَلُوا وَلَن تَفْعَلُوا فَاتَّقُوا النَّارَ الَّتِي وَقُودُهَا النَّاسُ وَالْحِجَارَةُ ۖ أُعِدَّتْ لِلْكَافِرِينَ ﴿٢٤﴾

(२४) अनि यदि तिमीहरूले यसो गरेनौ र कदापि गर्न सक्दैनौ [2] भने (त्यसलाई सत्य स्वीकार गर), त्यस अग्निसित तर्स जसका इंधन मनुष्य र ढुङ्गा हुन् ।[3] जुन काफ़िरहरूका नकार्नेहरूका निम्ति तयार गरिएको छ ।[4]

[1]तौंहीद (अल्लाहलाई एक मान्नु) उपरान्त अब रिसालत (ईशदूतत्व) को विषयमा भनिंदैछ, हामीले आफ्नो भक्तमाथि जुन किताब अवतरित गर्‍यौं, त्यस अल्लाहतिर बाट अवतरित हुने कुरोमा तिमीलाई यदि सन्देह छ भने तिमी आफ्ना सबै सहायता गर्नेहरू मिलेर यस जस्तो एक सूर: नै बनाएर देखाउ र यदि तिमी यसो गर्न सक्दैनौ भने तिमीले यो बुझ्नुपर्छ कि वास्तवमा यो कथन कुनै मनुष्यको उत्पत्ति होइन बरू अल्लाहकै कथन हो । र हामीमाथि र मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमाथि विश्वास गरी नरकको अग्निबाट बच्ने प्रयत्न गर । नरकको अग्नि, जुन काफ़िरहरूको लागि तयार गरिएको छ ।

[2]यस कुर्आन करीमको सत्यताको एउटा स्पष्ट प्रमाण हो कि अरब र अन्य क्षेत्रका सबै काफ़िरहरूलाई खुलारुपले चुनौती दिइयो, परन्तु उनीहरू आजसम्म यसको उत्तर दिन सकेनन् र अवश्य नै प्रलय आउन्जेलसम्म यस्तो गर्न सक्ने छैनन् ।

[3]इब्ने अब्बास (رضی الله عنه) अनुसार ढुङ्गाको तात्पर्य गन्धकको चट्टान हो, र केही ज्ञानीहरू अनुसार ढुङ्गाका ती देवता (मूर्तिहरू) पनि नरकको इंधन हुनेछन्, जसलाई संसारमा उनीहरू पूजा गरिराखेका हुन्थे । (पवित्र) कुर्आनमा पनि छ ।

﴿إِنَّكُمْ وَمَا تَعْبُدُونَ مِن دُونِ اللَّهِ حَصَبُ جَهَنَّمَ﴾ [الأنبياء: ٩٨]

"तिमीं र जसलाई तिमी पूजा गर्दछौ, नरकका इंधन हुनेछन् ।" (अल-अम्बिया-९८)

[4]यसबाट एउटा कुरा यो थाहा भयो कि नरक वास्तवमा काफ़िर र मुश्रिकहरूका लागि बनाइएको छ र दोस्रो कुरो यो थाहा भयो कि स्वर्ग एवं नरकको अस्तित्व छ, जुनकि यस समय पनि प्रमाणित छ ।

وَبَشِّرِ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّلِحَتِ أَنَّ لَهُمْ جَنَّتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَرُ كُلَّمَا رُزِقُوا مِنْهَا مِن ثَمَرَةٍ رِّزْقًا قَالُوا هَذَا الَّذِي رُزِقْنَا مِن قَبْلُ وَأُتُوا بِهِ مُتَشَبِهًا وَلَهُمْ فِيهَا أَزْوَاجٌ

(२५) र ईमान भएका र सत्य-कर्म गर्नेहरूलाई,[1] ती स्वर्गहरूबारे शुभ-सूचना दिनुस् जसमुनि नहरहरू बगिराखेका छन्। जब उनीहरूलाई तिनीबाट खानलाई फल दिइन्छ, तब भन्नेछन् कि यसभन्दा पूर्व हामीलाई खानको लागि यही नै दिइयो, तिनीहरु समारुपी (मिल्दा-जुल्दा) फलहरू हुनेछन् ।[2]

यही सलफ-ए-उम्मत (इस्लामको मार्गमा पूर्णरूपले हिंड्नेवालाहरू) को पनि विश्वास छ । यो उपमा मात्र होइन, जस्तो कि आधुनिक युगका केही अवज्ञाकारी एवं तर्क शास्त्रीहरू, हदीस बताउँछन् ।

[1]पवित्र कुर्आनमा हरेक स्थानमा ईमानको साथ-साथै सत्यकर्मको वर्णन गरेर यस कुरालाई स्पष्ट गरिदिइएको छ कि ईमान र सत्कर्मको बडो नजिकको सम्बन्ध छ । सत्कर्म बिना ईमानको कुनै लाभ छैन र ईमान बिना सत्कर्मको अल्लाह नजिक कुनै मूल्य छैन । र सत्कर्म के हो ? जुन सुन्नत अनुसार हुन्छ र शुद्धरुपले अल्लाहको प्रसन्नताको लागि गरिन्छ । सुन्नतको विपरीत कर्म पनि अस्वीकार्य छ र आडम्बरको निम्ति गरिएका कार्य पनि व्यर्थ एवं निष्फल हुन्छन् ।

[2]मुतशाबेहा "متشابها" को अर्थ या त स्वर्गका सबै फलहरूका रुप एकै नासको हुनु हो अथवा संसारका फलहरूको रुपको जस्तो हुनु हो । परन्तु यो समानता मात्र रुप एवं नामको सीमासम्म नै हुनेछ, नत्रभने स्वर्गका फलहरूका स्वादसित सांसारिक फलहरूको कुनै सम्बन्ध नै छैन । स्वर्गका सुखहरूको बिषयमा हदीसमा छ :

(مالاَ عَينٌ رَأتْ ، وَلَا أُذُنٌ سَمِعَتْ، وَلَا خَطَرَ عَلَىٰ قَلْبِ بَشَرٍ)

"न कुनै आँखाले उनीहरूलाई देख्यो, न कुनै कानले उनको विषयमा सुन्यो, देख्नु र सुन्नु त टाढाको कुरो हो । कुनै मनुष्यको मनमा यसको विचार पनि आएको हुनेछैन ।"

(सहीह बुखारी, तफ़सीर सूर: अस् सजद:)

مُّطَهَّرَةٌ ۙ وَّهُمۡ فِيۡهَا خٰلِدُوۡنَ ۝٢٥

तथा उनीहरूका निम्ति त्यसमा पवित्र पत्नीहरू हुनेछन्[1] र उनीहरू त्यसमा सधै रहनेछन्।[2]

اِنَّ اللّٰهَ لَا يَسۡتَحۡىٖۤ اَنۡ يَّضۡرِبَ مَثَلًا مَّا بَعُوۡضَةً فَمَا فَوۡقَهَا ؕ فَاَمَّا الَّذِيۡنَ اٰمَنُوۡا فَيَعۡلَمُوۡنَ اَنَّهُ الۡحَـقُّ مِنۡ رَّبِّهِمۡ ۚ وَاَمَّا الَّذِيۡنَ كَفَرُوۡا فَيَقُوۡلُوۡنَ مَاذَآ اَرَادَ اللّٰهُ بِهٰذَا مَثَلًا ۘ يُضِلُّ بِهٖ كَثِيۡرًا ۙ وَّيَهۡدِىۡ بِهٖ كَثِيۡرًا ؕ وَمَا يُضِلُّ بِهٖۤ اِلَّا الۡفٰسِقِيۡنَ ۝٢٦

(२६) नि:सन्देह अल्लाह तआ़ला कुनै कुराको उपमा दिन सङ्कोच गर्दैन, चाहे त्यो मच्छर (लामखुट्टे) को होस् अथवा त्यस भन्दा पनि तुच्छ कुराको ।[3] ईमानवालाहरू त्यसलाई आफ्नो प्रभुबाट सत्य ठान्छन् र काफ़िरहरू भन्छन् कि यस्तो उपमा दिनबाट अल्लाहको अभिप्राय के हो ? यसैसित अधिकतरलाई पथभ्रष्ट गर्दछ र प्राय:

[1]अर्थात् मासिक धर्म वा मल-मूत्र र अन्य प्रकारका अपवित्रताहरूबाट शुद्ध हुनेछन्।

[2]خلود को अर्थ सदैव हो । स्वर्गवासीहरु सधैं स्वर्गमा बास गर्नेछन् र प्रसन्न रहनेछन् । र नरकवासीहरु सधैं नरकमा नै रहनेछन् र यातना भोगिरहने छन् । स्वर्ग र नरकमा गएपछि एउटा फरिश्ताले पुकारने छ :

(يَا أهْلَ النَّارِ لَا موتَ ، وَيَا أهلَ الْجَنَّةِ لا موتَ، خُلُوْدٌ)

"हे नरकवासीहरू ! अब मृत्यु छैन र हे स्वर्गवासीहरू ! अब मृत्यु छैन । जुन मानिसहरू जुन स्थितिमा छन् त्यही स्थितिमा सधैं रहनेछन् ।" (बुख़ारी, अर-रक़ाक) (मुस्लिम किताब अल-जन्ना)

[3]जब अल्लाह तआ़लाले तर्कपूर्ण प्रमाणहरूबाट कुरआ़नलाई चमत्कार सिद्ध गरिदियो तब काफ़िरहरूले एक अर्के किसिमले प्रतिवाद गरे। त्यो के भने यदि यो कथन प्रभुको भएको भए यति महान शक्तिको अवतरित कथनमा तुच्छ कुराहरूको उदाहरण अथवा उपमाहरू हुन्नथे । अल्लाह तआ़लाले यसको उत्तरमा भन्नुभयो कि कुराको पुष्टि र कुनै तर्कलाई सिद्ध गर्नको लागि उपमाहरूको वर्णन गर्ने कुरामा कुनै अनुपयोगिता छैन, यसमा कुनै लज्जा र पर्दाको पनि आवश्यकता छैन। فوقها जुन लामखुट्टे भन्दामाथि हुन्छ अर्थात् त्यसका प्वाँख अथवा पखेटा, तात्पर्य लामखुट्टे भन्दा पनि तुच्छ कुरो । अथवा فوق को अर्थ 'त्यसभन्दा पनि उच्च' हुन सक्छ। यस स्थितिमा अर्थ "लामखुट्टे भन्दा पनि ठूलो कुनै कुरा" होला । शब्द فوقها मा दुवै अर्थहरुको स्थान प्राप्त छ ।

मानिसहरूलाई सत्य मार्गमा ल्याउँछ ।[1] र पथ-भ्रष्ट त्यो मात्र अवज्ञाकारीहरूलाई नै गर्दछ ।

(२७) जुन मानिसहरू अल्लाह तआलासँग गरिएको सुदृढ प्रतिज्ञालाई[2] तोड्छन् र अल्लाह तआलाले जुन कुराहरूलाई जोड्न आदेश दिएको छ, त्यसलाई काट्दछन्, र धर्तीमा

الَّذِينَ يَنقُضُونَ عَهْدَ اللَّهِ مِن بَعْدِ مِيثَاقِهِۦ وَيَقْطَعُونَ مَآ أَمَرَ اللَّهُ بِهِۦٓ أَن يُوصَلَ وَيُفْسِدُونَ فِى الْأَرْضِ ۚ أُولَٰٓئِكَ هُمُ الْخَٰسِرُونَ ﴿٢٧﴾

[1]अल्लाहद्वारा वर्णन गरिएका उदाहरणहरूबाट ईमानवालाहरूको ईमानमा वृद्धि हुन्छ र काफिरहरूको कुफ्रमा वृद्धि हुन्छ । र यो सब अल्लाहको आज्ञा र निर्देश एवं नियमहरूकै अर्न्तगत हुन्छ, जसलाई कुरआनले

﴿نُوَلِّهِۦ مَا تَوَلَّىٰ﴾

"जतातिर कोही फर्कन्छ हामी त्यतैतिर उसलाई फर्काइदिन्छौं ।" (अन-निसा-११५)

र हदीसमा (كُلٌّ مُيَسَّرٌ لِمَا خُلِقَ لَهُ) (सहीह बुखारी व्याख्या सूरः अल-लैल) सित तुलना गरिएको छ । फ़िस्क (अवज्ञाकारिता) अल्लाहको अनुकरणबाट निष्कासित-हुनलाई भन्छन्, जुन अस्थाई एक सामयिक स्थितिको कारण ईमानवालाहरू मध्येबाट पनि हुनसक्छ । तर यस आयतमा अवज्ञाकारिताको तात्पर्य अनुकरणबाट पूर्णरुपण निष्कासित अर्थात् कुफ्र लिइएको छ । जस्तो कि अगाडीको आयतमा स्पष्ट छ कि यसमा ईमानवालाहरूको सापेक्ष काफिरहरूका विशेषताहरूको वर्णन छ ।

[2]टीकाकारहरूले عهد का विभिन्न भावार्थ वर्णन गरेका छन् । उदाहरणतः १– अल्लाहको त्यो निर्देश जुन कि उसले आफ्ना नियमहरूलाई पूरा गर्ने र उनीहरूलाई नकार्ने सम्बन्धमा अंबिया अलैहिस्सलामद्वारा मनुष्यसम्म पुऱ्यायो । २–त्यो प्रतिज्ञा जुन कि पूर्व अवतरित किताबहरूमा विश्वास गर्नेहरूबाट "तौरात" मा लिइयो कि संसारको लागि अन्तिम नबी आए उपरान्त तिम्रो निम्ति उनको समर्थन गर्नु र उनको नबूवतमा विश्वास गर्नु आवश्यक छ । ३– त्यो "अलस्त" को प्रतिज्ञा जुन आदमको शरीरबाट निकालिए पछि आदमका परिवारवालाहरूबाट लिइयो, जसको वर्णन कुरआन मजीदमा गरियो ।

﴿وَإِذْ أَخَذَ رَبُّكَ مِنۢ بَنِىٓ ءَادَمَ مِن ظُهُورِهِمْ﴾ (अल-आराफ़-१७२)

प्रतिज्ञा तोड्नुको अर्थ प्रतिज्ञाको अवहेलना गर्नु हो । (इब्ने कसीर)

उपद्रव फैलाउँछन्, यिनीहरू नै हानि बेहोर्नेछन् ।[1]

كَيْفَ تَكْفُرُونَ بِاللَّهِ وَكُنتُمْ أَمْوَاتًا فَأَحْيَاكُمْ ۖ ثُمَّ يُمِيتُكُمْ ثُمَّ يُحْيِيكُمْ ثُمَّ إِلَيْهِ تُرْجَعُونَ ﴿٢٨﴾

(२८) तिमी अल्लाहलाई कसरी अस्वीकार गर्न सक्छौ ? तिमी निर्जीव थियौ त उसले तिमीलाई जीवन दियो, पुन: तिमीलाई मृत्यु दिनेछ, अनि पुनर्जीवित गर्नेछ,[2] अनि तिमीलाई उसैको पासमा जानुपर्ने छ ।

هُوَ الَّذِي خَلَقَ لَكُم مَّا فِي الْأَرْضِ جَمِيعًا ثُمَّ اسْتَوَىٰ إِلَى السَّمَاءِ فَسَوَّاهُنَّ سَبْعَ سَمَاوَاتٍ ۚ وَهُوَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٢٩﴾

(२९) उसैले तिम्रो लागि, जे-जति धर्तीमा छ, सबै पैदा गऱ्यो,[3] अनि आकाशको विचार गऱ्यो[4] तथा उसले सात वटा संतुलित आकाश बनाइदियो,[5] र त्यो सर्वज्ञ छ ।

[1]यो स्पष्ट छ कि हानि अल्लाहका आदेशहरूलाई पालना नगर्नेहरूकै हुनेछ, अल्लाहलाई अथवा त्यसका ईशदूतहरू एवं त्यसतिर आमन्त्रित गर्नेवालाको केही बिग्रने छैन ।

[2]आयतमा दुई मृत्यु र दुई जीवनको वर्णन छ । पहिलो मृत्युको अर्थ अनस्तित्व (अर्थात् नहुनु) हो र पहिलो जीवन माताको गर्भबाट जन्मे पश्चात मृत्युसम्म छ । अनि मृत्यु आउने छ र त्यसपछि आख़िरतको जीवन दोस्रो जीवन हुनेछ । जसलाई प्रलयमा विश्वास नगर्नेहरू अस्वीकार गर्दछन् । यसै अनुसार कब्रको जीवन (लगभग) सांसारिक जीवनमा नै सम्मिलित हुनेछ । (फ़तहुल क़दीर) केही आलिमहरू (इस्लाम धर्मबारे ज्ञान राख्ने विद्वानहरू) का निकट बर्ज़खको जीवन, आख़िरतको जीवनभन्दा पूर्वकालको हो र त्यसको आरम्भिक परिणाम पनि, तसर्थ यसको सम्बन्ध आख़िरत (परलोक) को जीवनसँग छ ।

[3]यसबाट यो सिद्ध गरियो कि धर्तीका सबै वस्तुहरुको लागि वास्तविक "हिल्लत" (हलाल अथवा प्रयोग गर्ने योग्य) छ, यसको अतिरिक्त कि त्यसको हराम (प्रयोग नगर्नु) हुनु किताब वा सुन्नतबाट सिद्ध छ । (फ़तहुल क़दीर)

[4]इस्लाम धर्मका केही अनुयायीहरूले यसको अनुवाद :

﴿ثُمَّ اسْتَوَىٰ عَلَى الْعَرْشِ﴾

"फेरी आकाशतिर उक्लिहाल्यो ।" गरेका छन् । (सहीह बुख़ारी)

अल्लाह तआला आकाशहरूमाथि अर्शमा उक्लिनु र मुख्य-मुख्य अवसरहरूमा संसारका समीप आकाशमा ओर्लनु अल्लाहका विशेषताहरूमध्ये हो । जसमा यसैप्रकार

(३०) र जब तिम्रो प्रभुले फरिश्ताहरूसित भन्यो [१] कि, म धर्तीमा एक ख़लीफा[२] यस्तो

وَإِذْ قَالَ رَبُّكَ لِلْمَلَٰٓئِكَةِ إِنِّي جَاعِلٌ فِي الْأَرْضِ خَلِيفَةً ۖ قَالُوٓا۟ أَتَجْعَلُ فِيهَا

विश्वास गर्नु आवश्यक छ, जुनप्रकार कुर्आन र हदीसमा वर्णन गरिएको छ ।

[४]यसबाट यो विदित भयो कि "आकाश" वास्तविक अस्तित्व हो । मात्र ऊँचाइ अथवा दूरीको नाम होइन । अर्को कुरो यो थाहा भयो कि यिनका सात तल्ला छन् । र हदीस अनुसार दुई आकाश तलाहरूको दूरी पाँच सय वर्ष छ । र धर्तीको विषयमा कुर्आन करीममा छ ।

(وَمِنَ الْأَرْضِ مِثْلَهُنَّ)

"र धर्ती पनि आकाशकै समान छ ।" (अत-तलाक-१२)

यसबाट धर्तीको संख्या पनि सातवटा भएको थाहा हुन्छ । यसको अन्य प्रमाणिकता हदीसबाट भईहाल्छ ।

(مَنْ أَخَذَ شِبْرًا مِنَ الْأَرْضِ ظُلْمًا فَإِنَّهُ يُطَوَّقُهُ يَوْمَ الْقِيَامَةِ مِنْ سَبْعِ أَرَضِينَ)

"जसले अत्याचारबाट कसैको एक बालिश्त (बुढी औंलाका टुप्पादेखि मुड्कीको तर्जनीसम्मको नाप बराबर) धर्ती लिन्छ भने अल्लाह तआलाले उसलाई सातौं धर्तीको तौक़ पहिराउने छ ।" (सहीह बुख़ारी)

यस आयतबाट यो पनि थाहा हुन आउँछ कि आकाशभन्दा पहिला धर्तीको सृष्टि भएको थियो, तर सूरः नाज़िआतमा आकाशको वर्णन पश्चात भनिएको छ, ।

﴿وَالْأَرْضَ بَعْدَ ذَٰلِكَ دَحَاهَا﴾

"धर्तीलाई त्यसको पश्चात ओछ्यायो ।"

यसबाट यो भावार्थ निकालियो कि पहिलो सृष्टि धर्तीको भएको हो र दहू (सफा र ठीक पारेर ओछ्याउनु) सृष्टिभन्दा भिन्दै वस्तु हो जुन कि आकाशको सृष्टि पश्चात अस्तित्वमा आयो । (फ़तहुल क़दीर)

[१]मलायेका (फरिश्ताहरू) अल्लाहको प्रकाशबाट पैदा गरिएको सृष्टि हो जसको निवास आकाशमाथि छ, जो आफ्नो प्रभुको आदेशको पालना गर्दछन् एवं उसको प्रशंसा र पवित्रताको गुणगानमा व्यस्त रहन्छन् र त्यसको कुनै आदेशको अवहेलना गर्दैनन् ।

مَن يُفْسِدُ فِيهَا وَيَسْفِكُ الدِّمَاءَ وَنَحْنُ نُسَبِّحُ بِحَمْدِكَ وَنُقَدِّسُ لَكَ قَالَ إِنِّي أَعْلَمُ مَا لَا تَعْلَمُونَ ﴿٣٠﴾

समूह जो एक-अर्काको पछाडि आउने छ)[1] बनाउन गइराखेको छु, त उनीहरूले भने के तपाईं त्यसमा यस्ता मानिसलाई पैदा गर्नुहुन्छ जो त्यसमा आतङ्क एवं रक्तपात गर्दछ, र हामी तिम्रो प्रशंसाका साथ तिम्रो महिमागान एवं तिम्रो पवित्रताको वर्णन गरिरहन्छौं । उसले भन्यो– जुन कुरो म जान्दछु तिमी जान्दैनौ ।[2]

وَعَلَّمَ آدَمَ الْأَسْمَاءَ كُلَّهَا ثُمَّ عَرَضَهُمْ عَلَى الْمَلَائِكَةِ فَقَالَ أَنبِئُونِي بِأَسْمَاءِ هَٰؤُلَاءِ إِن كُنتُمْ صَادِقِينَ ﴿٣١﴾

(३१) र अल्लाह तआ़लाले आदमलाई सबै वस्तुहरूको नाम सिकाई ती कुराहरूलाई फरिश्ताहरूको अगाडी पेश गरिदियो र भन्यो कि यदि तिमी साँचो हौ भने यी कुराहरूको नाम भन ।

قَالُوا سُبْحَانَكَ لَا عِلْمَ لَنَا إِلَّا مَا عَلَّمْتَنَا إِنَّكَ أَنتَ الْعَلِيمُ الْحَكِيمُ ﴿٣٢﴾

(३२) ती सबैले भने, हे अल्लाह ! तिमी महिमावान छौ, हामीलाई त त्यति मात्र ज्ञान छ,

[1]ख़लीफ़ाको अर्थ यस्तो प्राणी हो जो एक पछि अर्को आउने छ । (इब्ने कसीर)

[2]फरिश्ताहरूको यो भनाई कुनै ईर्ष्या अथवा परिवादको रुपमा थिएन, बरु त्यसको वास्तविकता एवं कारण जान्नलाई थियो कि हे प्रभु ! त्यस (प्राणी) सृष्टिलाई पैदा गर्नुको कारण के छ ? जबकि उनीहरूमध्ये केही यस्ता मानिसहरू पनि हुनेछन् जसले आतङ्क फैलाउनेछन्, रक्तपात गर्नेछन् । यदि यसको कारण इबादत (उपासना) गर्नु हो भने यस कार्यको निम्ति हामी त छौं, हामीमा त्यो भय पनि छैन, जुन कि नयाँ सृष्टिबाट सम्भावित छ । अल्लाह तआ़लाले भन्नुभयो कि म ती कारणहरूलाई जान्दछु, जसबाट यी वर्णित नराम्रा कुराहरू हुँदाहुँदै पनि म त्यसलाई पैदा गरिराखेको छु जुन कि तिमी जान्दैनौ । किनभने तिनीहरूमा अम्बिया (नबीहरु), शहीद र सत्कर्मी र पवित्र मानिसहरू एवं औलिया पनि हुनेछन् । (इब्ने कसीर)

आदमको परिवारको विषयमा फरिश्ताहरू (ईशदूत) लाई कसरी थाहा भयो । यसलाई उनीहरूले मानिसभन्दा पहिलाको सृष्टिका कर्महरूका आधारमा बूझे होलान् अथवा कुनै अन्य प्रकारले जानेका होलान् । केहीले भनेका छन् कि अल्लाह स्वयंमले भनिदिएको थियो कि उनीहरूले यस्ता-यस्ता कर्म गर्नेछन् । यस प्रकार उनीहरू कथनमा कमी मान्छदन् कि
(إِنِّي جَاعِلٌ فِي الْأَرْضِ خَلِيفَةً يَفْعَلُ كَذَا وَكَذَا) (फतहुल-क़दीर)

जति तिमीले हामीलाई सिकाएका छौ, पूर्ण ज्ञान भएको एवं तत्वदर्शी तिमी नै छौ ।

(३३) अल्लाह तआला़ले आदम (अलैहिस्सलाम) सित भन्नुभयो, "तिमी यिनीहरूको नाम भनिदेउ ।"[1] जब उनले भनिदिए तब अल्लाहले भन्नुभयो के मैले तिमीहरूलाई अघि भनेको थिइन कि म आकाशहरू एवं धर्तीको परोक्षज्ञ (ज्ञान भएको) हुँ तथा जे तिमी गर्छौ एवं लुकाउँछौ त्यो जान्दछु ? ।

قَالَ يٰۤاٰدَمُ اَنۢبِئْهُمْ بِاَسْمَآىِٕهِمْ ۚ فَلَمَّاۤ اَنۢبَاَهُمْ بِاَسْمَآىِٕهِمْ ۙ قَالَ اَلَمْ اَقُلْ لَّكُمْ اِنِّیْۤ اَعْلَمُ غَیْبَ السَّمٰوٰتِ وَالْاَرْضِ ۙ وَاَعْلَمُ مَا تُبْدُوْنَ وَمَا كُنْتُمْ تَكْتُمُوْنَ ۝٣٣

(३४) र जब हामीले फरिश्ताहरूसित भन्यौं कि आदमलाई ढोक,[2] त इबलीस

وَاِذْ قُلْنَا لِلْمَلٰٓىِٕكَةِ اسْجُدُوْا لِاٰدَمَ فَسَجَدُوْۤا اِلَّاۤ اِبْلِیْسَ ؕ اَبٰى وَاسْتَكْبَرَ ۗ

[1] أسماء (नाम) को तात्पर्य مسميات (व्यक्ति र वस्तुहरूका नाम एवं उनीहरूका विशेषताहरू र लाभको ज्ञान हो) जुन कि अल्लाह तआला़ले माननीय आदमको मनमा अथवा वुद्धिमा आफ्नो अन्तर्यामी शक्तिले हालिदिएका थिए । अनि जब भनियो कि आदम यिनीहरूका नाम (एवं लाभ) भन, तब उनले तुरुन्त सबै कुरा भनिदिए जुन कि फरिश्ताहरूले भन्न सकेनन् । यसप्रकार अल्लाह तआला़ले आदमलाई सृष्टि गर्नुको उद्देश्य स्पष्ट गरिदियो । दोस्रो, संसारको संचालनको लागि ज्ञानको आवश्यकता एवं विशेषताको वर्णन गर्‍यो । जब यो कारण र ज्ञानको आवश्यकता फरिश्ताहरूलाई स्पष्ट भयो तब उनीहरूले आफ्नो अज्ञानता स्वीकार गरे । फरिश्ताहरूले यो स्वीकार गरेपछि यो पनि स्पष्ट भयो कि अन्तर्यामी मात्र अल्लाह नै छ । अल्लाहका पुण्यात्मा भक्तहरूलाई पनि त्यति मात्र ज्ञान हुन्छ जति अल्लाह तआला़ले उनीहरूलाई प्रदान गर्दछ ।

[2] ज्ञानको सर्वपरिताको उपरान्त माननीय आदमलाई दोस्रो सम्मान प्राप्त भयो । सजदाको अर्थ हो विनय एवं नम्रता र त्यसको अन्तिम सीमा हो–"धर्तीमा निधारले टेक्नु ।" अल्लाह तआला बाहेक कसैको समक्ष नतमस्तक हुने आदेश इस्लामी कानूनले दिँदैन । नबी सल्लल्लाहु अलैहि वसल्लमको प्रख्यात आदेश छ कि

(لَوْ كُنْتُ آمِراً أَحَداً أَنْ يَسْجُدَ لِأَحَدٍ لَأَمَرْتُ الْمَرْأَةَ أَنْ تَسْجُدَ لِزَوْجِهَا)

यदि कुनै अन्यको लागि सजद: गर्ने अनुमति भएको भए म पत्नीलाई आदेश दिन्थे कि त्यसले आफ्नो पति समक्ष सजद: गरोस् । तर अल्लाहको आदेशमा फरिश्ताहरूले माननीय आदमको समक्ष सजद: गरे । यो सजद: (ढोक्) सम्मानको लागि थियो न कि पूजाको रुपमा । अब कसैलाई सम्मान स्वरुप पनि सजदा गर्न सकिन्न ।

وَكَانَ مِنَ الْكٰفِرِيْنَ ﴿٣٤﴾

बाहेक सबैले ढोके । उसले नकाऱ्यो र घमण्ड गऱ्यो[1] र त्यो काफ़िरहरूमध्ये थियो ।[2]

وَقُلْنَا يٰٓاٰدَمُ اسْكُنْ اَنْتَ وَزَوْجُكَ الْجَنَّةَ وَكُلَا مِنْهَا رَغَدًا حَيْثُ شِئْتُمَا ۖ وَلَا تَقْرَبَا هٰذِهِ الشَّجَرَةَ فَتَكُوْنَا مِنَ الظّٰلِمِيْنَ ﴿٣٥﴾

(३५) र हामीले भन्यौं, "हे आदम ! तिमी र तिम्रो पत्नी स्वर्गमा बस,[3] र जहाँबाट चाहन्छौ मनग्य खांउ-पिउ, तर यस वृक्ष[4] समीप नजानू, अन्यथा अत्याचारीमध्ये हुनेछौ ।

فَاَزَلَّهُمَا الشَّيْطٰنُ عَنْهَا فَاَخْرَجَهُمَا مِمَّا كَانَا فِيْهِ ۖ وَقُلْنَا اهْبِطُوْا

(३६) तर शैतानले उनीहरुलाई पथ-भ्रष्ट गरी त्यहाँबाट निष्कासित गराइ नै हाल्यो,[5] र हामीले भन्यौं कि

[1]इब्लीसले ढोक्नबाट नकाऱ्यो र अपमानित भयो । कुर्आन अनुसार इब्लीस जिन्नातहरू मध्येको थियो, तर अल्लाह तआलाले त्यसलाई सम्मान स्वरुप फरिश्ताहरूमा सम्मिलित गरिहालेको थियो, यसकारण अल्लाहको आदेशानुसार उसले पनि ढोक्नु आवश्यक थियो, तर उसले गरेको डाह र घमण्ड त्यो पाप हो जसलाई मानवताको संसारमा सबभन्दा पहिला गरियो र यसलाई गर्नेवाला इब्लीस थियो ।

[2]अर्थात् अल्लाह तआलाको पूर्व ज्ञानमा थियो ।

[3]यो माननीय आदमको तेस्रो सम्मान थियो, कि स्वर्गलाई उनको निवास स्थानको रुपमा प्रदान गरिएको थियो ।

[4]यो वृक्ष के को थियो ? त्यसको विषयमा कुर्आन र हदीसमा स्पष्टरुपले केही पाइँदैन । यसलाई गहुँको बोटको रुपमा मान्न थालियो, जुनकि अवास्तविक छ । हामीलाई त्यसको नामबारे थाहा पाउनु आवश्यक छैन र न त्यसको कुनै लाभ छ ।

[5]शैतान, स्वर्गमा प्रवेश गरी उनलाई बहकाई मार्ग-विचलित गर्न थाल्यो अथवा भ्रम उत्पन्न गर्न थाल्यो । यस विषयमा कुनै विस्तृत जानकारी छैन । तैपनि यो स्पष्ट छ कि जुनप्रकारले सजदा (ढोक) को आदेशको समय उसले अल्लाहको आदेशको समक्ष तर्क गरेर (कि म आदमभन्दा उच्च छु) सजदः गर्नबाट इन्कार गऱ्यो, त्यसैप्रकार यस समय पनि अल्लाह तआलाको आदेश ولا تقربا को विपरीत तर्क प्रस्तुत गरी माननीय आदम अलैहिस्सलामलाई विचलित गर्न सफल भयो । जसको सविस्तार वर्णन सूरः आराफ़मा आउने छ ।

بَعۡضُكُمۡ لِبَعۡضٍ عَدُوٌّۚ وَلَكُمۡ فِي ٱلۡأَرۡضِ مُسۡتَقَرٌّ وَمَتَٰعٌ إِلَىٰ حِينٖ ٣٦

"ओर्ल, तिमी सबै एक-अर्काका शत्रु हौ ।[1] र एक निश्चित समयसम्म तिमी धर्तीमा बस्नु छ र लाभ उठाउनु छ ।"

فَتَلَقَّىٰٓ ءَادَمُ مِن رَّبِّهِۦ كَلِمَٰتٖ فَتَابَ عَلَيۡهِۚ إِنَّهُۥ هُوَ ٱلتَّوَّابُ ٱلرَّحِيمُ ٣٧

(३७) आदम (अलैहिस्सलाम) ले आफ्नो पालनकर्ताबाट केही कुरा सिके[2] (र अल्लाहसित क्षमा-याचना गरे) उसले उनको याचना स्वीकार गऱ्यो, निःसन्देह त्यही क्षमा गर्ने, दयावान छ ।

قُلۡنَا ٱهۡبِطُواْ مِنۡهَا جَمِيعٗاۖ فَإِمَّا يَأۡتِيَنَّكُم مِّنِّي هُدٗى فَمَن تَبِعَ هُدَايَ فَلَا خَوۡفٌ عَلَيۡهِمۡ وَلَا هُمۡ يَحۡزَنُونَ ٣٨

(३८) हामीले भन्यौं तिमी सबै यहाँबाट ओर्ल, अनि जब तिम्रो पासमा मेरो तर्फबाट सत्यमार्ग आउँछ तब जो मेरो संमार्गको अनुसरण गर्दछन्, उनीहरूलाई कुनै भय हुनेछैन, न त उनीहरू दुःखी नै हुनेछन् ।

---

यसप्रकार अल्लाहको आदेश समक्ष तर्क-वितर्क प्रस्तुत गर्नेवाला पनि सर्वप्रथम शैतान नै हो । (نعوذ بالله منه)

[1]यसको तात्पर्य आदम र शैतान अथवा आदमका पुत्रहरू आपसमा एक-अर्काका शत्रु हुन् ।

[2]माननीय आदम अलैहिस्सलाम ग्लानि एवं दुःखहरूबाट प्रेरित भई धर्तीमा आए, अनि क्षमा-याचनामा लीन भइहाले । त्यस समय पनि अल्लाह तआलाले मार्गदर्शन एवं दयालुता गऱ्यो र क्षमाका ती शब्दहरू सिकायो जुन कि सूरः आराफ़मा वर्णित छन्– ﴿رَبَّنَا ظَلَمۡنَآ أَنفُسَنَا وَإِن لَّمۡ تَغۡفِرۡ لَنَا وَتَرۡحَمۡنَا﴾ केही यसमा एउटा बनावटी (मनगढन्त) हदीसको सहारा लिंदै भन्दछन् कि माननीय आदम अलैहिस्सलामले अर्श-ए-इलाहीमा (لَا إِلٰهَ إِلَّا اللهُ مُحَمَّدٌ رَّسُوْلُ اللهِ) लेखिएको देखे र मुहम्मद रसूल अल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) को माध्यमबाट प्रार्थना गरे अनि अल्लाह तआलाले उनलाई क्षमा गरिदियो । यो हदीस अप्रमाणित छ र कुरआनको विपरीत पनि छ । यसको अतिरिक्त अल्लाह तआलाले भनिएका तरीकाहरूको पनि विपरीत छ । सबै नबीहरूले सधैं सोझै अल्लाहसित प्रार्थनाहरू गरेका छन्, कुनै नबी, वली, पुण्यात्मा, महात्माको माध्यम समातेनन्, यसकारण नबी करीम सल्लल्लाहु अलैहि वसल्लमका साथ-साथै सबै नबीहरूको प्रार्थना गर्ने विधि यही नै रहेछ कि बिना कुनै माध्यम अल्लाहको दरबारमा प्रार्थना गरियोस् ।

(३९) र जो कुफ्र एवं झूठद्वारा हाम्रा आयतहरूलाई असत्य भन्दछन्, उनीहरू नरकमा बास गर्नेहरु हुन्, र सधैं त्यसैमा रहनेछन् ।[1]

وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَآ اُولٰٓئِكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ۝

(४०) हे इस्राईलका सन्तानहरु ![2] मेरो त्यस कृपालाई सम्भ जुनकि मैले तिमीमाथि गरें, तथा

يٰبَنِيْٓ اِسْرَاۤءِيْلَ اذْكُرُوْا نِعْمَتِيَ الَّتِيْٓ اَنْعَمْتُ عَلَيْكُمْ وَاَوْفُوْا بِعَهْدِيْٓ

[1]प्रार्थना स्वीकार गरेपछि अल्लाह तआलाले उनीहरूलाई पुनः स्वर्गमा प्रवेश गराउनुको सट्टा धर्तीमा नै रही स्वर्ग प्राप्त गर्ने उपदेश दियो र माननीय आदम अलैहिस्सलामलाई इंगित गरर समस्त आदमका सन्तानलाई स्वर्गमा प्रवेश प्राप्त गर्ने मार्ग भनिंदैछ कि नबीहरूद्वारा मेरा निर्देश (जीवन व्यतीत गर्ने आदेश एवं नियम) तिमीसम्म पुऱ्याउने छन्, जसले त्यसलाई स्वीकार गर्नेछ, त्यो स्वर्गको अधिकारी हुनेछ, अन्यथा त्यो अल्लाहको यातनाको अधिकारी हुनेछ। **"उनीहरूलाइ भय हुन छैन"** को सम्बन्ध परलोकसित छ। أي فيما يستقبلونه من أمور الدنيا तथा **"दुख हुने छैन"** को सम्बन्ध धर्तीसित छ । على ما فاتهم من أمور الدنيا (जो मरिसक्यो, धर्तीको कर्म आफ्नो पछाडी धर्तीमा नै छोडेर आयौ) जस्तो कि अर्को ठाउँमा छ ।

﴿ فَمَنِ اتَّبَعَ هُدَايَ فَلَا يَضِلُّ وَلَا يَشْقٰى ﴾

"जसले मेरा आदेशहरूको पालना गऱ्यो पछि त्यो न (धर्तीमा) भौतारिने छ र न आख़िरतमा ।" (ता.हा.-१२४) (इब्ने कसीर)

यसप्रकार ﴿ لَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴾ को स्थान प्रत्येक मोमिनलाई प्राप्त छ ! यो कुनै यस प्रकारको स्थान होइन जुन कि मात्र केही औलियालाई मात्र प्राप्त होस् । र यस स्थानको भावार्थ केहीको केही वर्णित गरिन्छ । हुन त समस्त मोमिन र अल्लाहसित तर्सनेवाला पनि औलिया हुन् । "औलिया" कुनै पृथक सृष्टि होइन ।

[2]إسرائيل (इस्राईलको अर्थ अब्दुल्लाहसित लिइन्छ) जो आदरणीय याकूब अलैहिस्सलामको उपाधि थियो । यहूदीहरूलाई इस्राईलका पुत्र भनिन्छ अर्थात् याकूब अलैहिस्सलामका पुत्र, किनभने याकूब अलैहिस्सलामका बारह पुत्र थिए, जसबाट यहूदीहरूका बारह क़बीला (समुदाय) बने र उनीहरूमा धेरैजसो नबी र रसूल भए । यहूदीहरूलाई अरबमा तिनीहरुको प्राचीन इतिहास, ज्ञान एवं धर्मसित सम्बन्ध भएको कारणले एक विशेष स्थान थियो । यसकारण उनीहरूको अधिका सम्मान एवं आदर जुन अल्लाहले प्रदान गरेको थियो, स्मरण गराई भनिन्छ कि तिमी मेरो प्रतिज्ञा पूरा गर जो तिमीसित अन्तिम नबीको नबुअतको लागि र उनीमाथि

أَوْفِ بِعَهْدِكُمْ وَإِيَّايَ فَارْهَبُونِ ۝

म सित गरेको वाचा पूरा गर, म तिमीसित गरेको वचन पूरा गर्नेछु, तथा मात्र मसित नै तर्स ।

وَآمِنُوا بِمَا أَنزَلْتُ مُصَدِّقًا لِّمَا مَعَكُمْ وَلَا تَكُونُوا أَوَّلَ كَافِرٍ بِهِ ۖ وَلَا تَشْتَرُوا بِآيَاتِي ثَمَنًا قَلِيلًا وَإِيَّايَ فَاتَّقُونِ ۝

(४१) तथा त्यस (शास्त्र) प्रति विश्वास गर जसलाई मैले, त्यसलाई प्रमाणित गर्नको निम्ति उतारें जुन (तौरात) तिम्रो साथमा छ र तिमी यसको[1] प्रथम मुन्किर (नकार्नेवाला) न बन, र मेरा आयतहरूलाई सानो मूल्यमा न बेच,[2] र मात्र मसित तर्स ।

विश्वास गर्नको लागि लिइएको थियो । यदि तिमी आफ्नो प्रतिज्ञा पूरा गर्छौ भने म पनि आफ्नो प्रतिज्ञा पूरा गर्नेछु, कि तिमीमाथिबाट त्यो भार (बोझ) हटाइने छन् जुन कि तिम्रा आफ्ना त्रुटिहरू र आलस्यका कारण दंण्डको रुपमा लादिएका थिए । र तिमीलाई पुनः सम्मान प्रदान गरिने छ । मसित तर्स अन्यथा यो अपमानित भार सधैंको लागि तिमीमाथि लादिने छन्, जसबाट तिम्रा पूर्वज पनि पीडित थिए ।

[1] بِهِ को तात्पर्य कुर्आन अथवा अन्तिम ईशदूत मुहम्मद रसूल अल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित छ । दुवै कथन सत्य छ किनभने दुवैको सम्बन्ध जल र थलको जस्तो छ, जसले कुर्आन मानेन त्यसले मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई नकार्‍यो । (इब्ने कसीर) **“पहिला काफ़िर नबन”**

यसको अर्थ यो हो कि प्रथम त तिमीलाई जुन ज्ञान छ अरुहरू त्यसबाट अनभिज्ञ छन्, यसकारण तिम्रो उत्तरदायित्व सबभन्दा धेरै छ । द्वितीय मदीनामा यहूदीहरूलाई सर्वप्रथम ईमानको निमन्त्रणा दिइएको थियो, वरन् (अन्यथा) हिजरतभन्दा पहिला धेरैजसोले इस्लाम धर्म स्वीकार गरिसकेका थिए । यसकारण उनीहरूलाई सावधान गरिदैछ कि यहूदीहरूमा तिमी प्रथम काफ़िर नबन । यदि तिमी यस्तो गर्छौ भने समस्त यहूदीहरूको कुफ्र एवं नमान्नुको पाप तिमीमाथि पर्नेछ ।

[2] **“सानो मुल्यमा नबेच ।”** यसको तात्पर्य यो कदापि होइन कि अधिक मूल्य पाइएको छ भने अल्लाहको आदेशको (कुर्आन) सौदा गर, बरु यसको तात्पर्य यो हो कि अल्लाहको आदेशको तुलनामा सांसारिक लाभलाई महत्व नदेउ, अल्लाहका आदेश त यति बहुमूल्य छन् कि समस्त सांसारिक वैभव र वस्तुहरू तिनका तुलनामा तुच्छ छन् । आयतमा यद्यपि इस्राईलका पुत्रहरूतिर इंगित गरिएको छ तर यी आदेश प्रलयसम्म समस्त मानवगणका लागि छन् । जो कोही पनि सत्यलाई छाडि असत्यको पक्ष लिन्छ अथवा अज्ञानतालाई प्रदर्शित गरी सत्यसित

وَلَا تَلْبِسُوا الْحَقَّ بِالْبَاطِلِ وَتَكْتُمُوا الْحَقَّ وَأَنتُمْ تَعْلَمُونَ ﴿٤٢﴾

(४२) र सत्यलाई असत्यसँग मिश्रण न गर। तथा न त सत्यलाई लुकाउ, तिमीलाई त स्वयं यसको ज्ञान छ।

وَأَقِيمُوا الصَّلَاةَ وَآتُوا الزَّكَاةَ وَارْكَعُوا مَعَ الرَّاكِعِينَ ﴿٤٣﴾

(४३) र नमाज़ स्थापित गर, एवं ज़कात दिने गर रुकूअ गर्ने (झुक्ने व्यक्तिहरूसँग) वालाहरूको साथमा रुकूअ गर (झुक्ने गर)।

أَتَأْمُرُونَ النَّاسَ بِالْبِرِّ وَتَنسَوْنَ أَنفُسَكُمْ وَأَنتُمْ تَتْلُونَ الْكِتَابَ ۚ أَفَلَا تَعْقِلُونَ ﴿٤٤﴾

(४४) के मानिसहरूलाई सत्यकर्मको उपदेश दिन्छौ ? र आफूलाई बिर्सन्छौ, यद्यपि तिमीहरू किताब पढ्दछौ। के यति पनि तिमीमा बुद्धि छैन ?

وَاسْتَعِينُوا بِالصَّبْرِ وَالصَّلَاةِ ۚ وَإِنَّهَا لَكَبِيرَةٌ إِلَّا عَلَى الْخَاشِعِينَ ﴿٤٥﴾

(४५) र धैर्य एवं नमाज़को माध्यमबाट (अल्लाहको) सहायता प्राप्त गर।[1] र यो कुरा कठिन छ, तर अल्लाहसित तर्सनेहरूको लागि होइन।[2]

मात्र सांसारिक फल प्राप्तिको लागि मुख फर्काउनेछ, त्यो यस आदेशमा सम्मिलित छ। (फ़तहुल क़दीर)

[1]धैर्य र नमाज़ प्रत्येक अल्लाहवालाका दुई ठूला हतियार हुन्, नमाज़द्वारा एउटा मोमिनको अल्लाहसित सम्बन्ध सजिलोसँग हुन्छ, जसबाट उसलाई अल्लाह तआलाको सहमति एवं सहायता प्राप्त हुन्छ। धैर्यद्वारा उसको चरित्रमा दृढता र धर्ममा परिपक्वता उत्पन्न हुन्छ। हदीसमा वर्णन छ :

(إِذَا حَزَبَهُ أَمْرٌ فَزِعَ إِلَى الصَّلَوٰةِ)

"नबी (सल्लल्लाहु अलैहि वसल्लमलाई जतिखेर पनि कुनै समस्या उत्पन्न हुन्थ्यो उहाँले तुरुन्त नमाज़को प्रायोजन गर्नुहुन्थ्यो।" (फ़तहुल क़दीरबाट उद्धृत र अहमद तथा अबू दाऊदमा संकलित)

[2]नमाज़मा निरन्तरता सामान्य मानिसहरूलाई कठिन प्रतीत हुन्छ। परन्तु सन्तुलित एवं स्थिर (खुशूअ् र खुज़ूअ्) रहनेवालालाई यो सरल, बरु शान्ति एवं सु:खको कारण हुन्छ। यी कुन मानिसहरू हुन् ? जो केयामतमा पूरा विश्वास (आस्था) राख्दछन् अर्थात् केयामतमा विश्वास सत्कर्मलाई सरल गरिदिन्छ र आख़िरतबाट निश्चिन्तता व्यक्तिलाई अकर्मी बरु कुकर्मी बनाइदिन्छ।

(४६) जो जान्दछन् कि आफ्नो प्रभुसित भेट्नु छ र त्यसतिर फर्केर जानु छ ।

الَّذِينَ يَظُنُّونَ أَنَّهُم مُّلَاقُوا رَبِّهِمْ وَأَنَّهُمْ إِلَيْهِ رَاجِعُونَ ﴿٤٦﴾

(४७) हे इस्राईलका सन्तानहरु ! मेरो त्यस कृपालाई स्मरण गर, जुन कि मैले तिमीमाथि गरेको थिएँ र मैले तिमीलाई समस्त संसारमाथि श्रेष्ठता दिएँ ।[1]

يَا بَنِي إِسْرَائِيلَ اذْكُرُوا نِعْمَتِيَ الَّتِي أَنْعَمْتُ عَلَيْكُمْ وَأَنِّي فَضَّلْتُكُمْ عَلَى الْعَالَمِينَ ﴿٤٧﴾

(४८) तथा त्यस दिनसित तर्स, जुन दिन कोही कसैको काम आउनेवाला छैन, न कसैको कुनै सिफारिश स्वीकार गरिने छ, न कुनै

وَاتَّقُوا يَوْمًا لَّا تَجْزِي نَفْسٌ عَن نَّفْسٍ شَيْئًا وَلَا يُقْبَلُ مِنْهَا شَفَاعَةٌ وَلَا يُؤْخَذُ مِنْهَا عَدْلٌ

[1]यहाँबाट इस्राईलका सन्तानलाई पुन: ती कृपाहरु स्मरण गराइँदै छन्, जुन कि उनीमाथि गरियो र उनलाई कयामतको दिनसित तर्साइँदैछ, जुन दिन कसैको लागि कोही काम आउने छैन, न त सिफरिश स्वीकार गरिने छ, न सट्टा भर्ना (साटो) दिएर छुटकारा पाइने छ, न कोही सहायक हुनेछ । एउटा त्यस कृपाको वर्णन गरिदैंछ जसबाट समस्त संसारमा श्रेष्ठता इस्राईलको सन्तानलाई प्राप्त थियो, जुन कि उनीहरूले अल्लाहको आदेशको उल्लघंन गरी गुमाइदिए र मुसलमानहरूलाइ خير أمة को उपाधिबाट विभूषित गरियो । यसमा यस कुराको चेतावनी छ कि अल्लाहको कृपा कुनै विशेष जातिप्रति सम्बन्धित छैन, बरु यो ईमान र कर्मको आधारमा प्राप्त हुन्छ । यदि ईमान र कर्म राम्रा छैनन् भने खोसिहालिन्छ । जुनप्रकारले मुसलमान पनि आजभोलि आफ्ना कुकर्महरु र शीर्क एवं बिदअ्तका कारण خير أمة बाट شر أمة बनेका छन् ।

यहूदीहरूलाई यो भ्रम थियो कि उनीहरू अल्लाहका प्रिय हुन्, यसकारण आखिरतको सोधपूछबाट सुरक्षित रहनेछन् । अल्लाह तआलाको आदेश भयो कि त्यहाँ अल्लाहका आदेशहरू नमान्नेवालाहरूलाई कोही सहायता दिनसक्ने छैन । उसै भ्रममा मुसलमानहरू पनि परेका छन् । र शिफाअत (सिफारिश) को प्रश्नलाई (जुनकि अहले सुन्नतकहाँ सत्य छ) आफ्ना कुकर्महरूलाई लुकाउन कवच बनाइराखेका छन् । नबी सल्लल्लाहु अलैहि वसल्लम अवश्य शिफ़ाअत गर्नेछन्, अल्लाह तआला उनको शिफ़ाअत पनि स्वीकार गर्ने छन् (सहीह हदीसहरूबाट प्रमाणित छ) तर यो पनि हदीसमा उल्लेख छ कि बिदअ्तका कर्म गर्नेवालाहरू यसलाई प्राप्त गर्न सक्ने छैनन् । तर धेरै पापीहरूलाई नरकमा दण्ड दिइसके उपरान्त उहाँको शिफ़ाअतले नरकबाट निकालिने छ । के नरकको या केही दिनहरूको दण्ड सहनीय छ कि हामी शिफ़ाअतमा विश्वास गरी कुकर्म गरिराखौं ?

وَلَا هُمْ يُنْصَرُوْنَ ﴿٤٨﴾

क्षतिपूर्ति (अर्थदण्ड) स्वीकार गरिने छ र न उनीहरूलाई सहायता दिइने छ ।

وَاِذْ نَجَّيْنٰكُمْ مِّنْ اٰلِ فِرْعَوْنَ يَسُوْمُوْنَكُمْ سُوْٓءَ الْعَذَابِ يُذَبِّحُوْنَ اَبْنَآءَكُمْ وَيَسْتَحْيُوْنَ نِسَآءَكُمْ ؕ وَفِيْ ذٰلِكُمْ بَلَآءٌ مِّنْ رَّبِّكُمْ عَظِيْمٌ ﴿٤٩﴾

(४९) र जब हामीले तिमीलाई फ़िरऔनका मानिसहरु[1] बाट छुटकारा मुक्ति दिलायौं, जसले तिमीलाई घोर यातना दिइराखेका थिए, तिम्रा छोराहरूको हत्या गरिराखेका थिए, तिम्रा छोरीहरूलाई (महिलाहरू) जीवित छाडिदिन्थे, यसबाट छुटकारा दिलाउनमा तिम्रो स्वामीको अत्याधिक उपकार थियो ।

وَاِذْ فَرَقْنَا بِكُمُ الْبَحْرَ فَاَنْجَيْنٰكُمْ وَاَغْرَقْنَآ اٰلَ فِرْعَوْنَ وَاَنْتُمْ تَنْظُرُوْنَ ﴿٥٠﴾

(५०) र जब हामीले तिम्रो निम्ति सागर लाई च्यातिदियौं र त्यसबाट तिमीलाई मुक्ति प्रदान गर्‍यौं र फ़िरऔनका साथीहरूलाई तिम्रा आँखा अगाडि डुबाइदियौं ।

وَاِذْ وٰعَدْنَا مُوْسٰٓى اَرْبَعِيْنَ لَيْلَةً ثُمَّ اتَّخَذْتُمُ الْعِجْلَ مِنْ بَعْدِهٖ

(५१) र हामीले (आदरणीय) मूसा (अलैहिस्सलाम) लाई चालीस रातहरूको वचन दियौं,

---

[1]आले फ़िरऔनसित तात्पर्य मात्र फ़िरऔन र त्यसका परिवार होइनन् बरु फिरऔनका समस्त साथीहरू हुन् । जस्तो कि अगाडी छ ।

﴿ وَاَغْرَقْنَا اٰلَ فِرْعَوْنَ ﴾

"हामीले फ़िरऔनका परिवारलाई डुबाइदियौ ।" यी डुब्नेवाला फ़िरऔनका परिवारवाला थिएनन्, त्यसका सेना एवं अन्य कर्मचारीहरू थिए । अर्थात् क़ुरआनमा आल, अनुयायी (भक्त) को अर्थमा प्रयोग भएको छ । यसको विस्तृत जानकारी सूर: अल-अहज़ाबमा छ ।

[2]सागरलाई च्यात्नु र त्यसमा मार्ग बनाइदिनु, यो एक चमत्कार थियो, जसको विस्तृत वर्णन सूर: "शोआरा" मा गरिएको छ । यो समुद्रको ज्वारभाटा थिएन, जस्तो कि सर सैय्यद अहमद ख़ान र अन्य, चमत्कारका इन्कार गर्नेवालाहरूको व्यक्तिगत विचार छ ।

وَاَنْتُمْ ظٰلِمُوْنَ ﴿٥١﴾

अनि पछि तिमीले बाछोलाई पूज्य बनायौ ।[1] र अत्याचारी बन्न पुग्यौ ।

ثُمَّ عَفَوْنَا عَنْكُمْ مِّنْۢ بَعْدِ ذٰلِكَ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٥٢﴾

(५२) तर हामीले यसपछि पनि तिमीलाई क्षमा गऱ्यौं, ताकि तिमी कृतज्ञ रह ।

وَاِذْ اٰتَيْنَا مُوْسَى الْكِتٰبَ وَالْفُرْقَانَ لَعَلَّكُمْ تَهْتَدُوْنَ ﴿٥٣﴾

(५३) र हामीले मूसा (अलैहिस्सलाम) लाई तिम्रो मार्गदर्शनका लागि धर्मशास्त्र (तौरात) र चमत्कार प्रदान गऱ्यौं ।[2]

وَاِذْ قَالَ مُوْسٰى لِقَوْمِهٖ يٰقَوْمِ اِنَّكُمْ ظَلَمْتُمْ اَنْفُسَكُمْ بِاتِّخَاذِكُمُ الْعِجْلَ فَتُوْبُوْٓا اِلٰى بَارِىِٕكُمْ فَاقْتُلُوْٓا اَنْفُسَكُمْ ذٰلِكُمْ خَيْرٌ لَّكُمْ

(५४) र जब मूसा (अलैहिस्सलाम) ले आफ्ना जातिका मानिसहरू (कौम) सित भने कि "हे मेरा जातिका मानिसहरू (कौम) ! तिमीले बाछोलाई देवता बनाई स्वयं आफूमाथि अत्याचार गरेका छौं । अब तिमी आफ्ना स्रष्टातिर ध्यान केन्द्रित गर, स्वयं आफूलाई (अपराधी) एक आपसमा हत्या गर । तिम्रो निम्ति भलाई

[1]यो गौपूजाको घटना त्यस समय भयो जब फ़िरऔन र त्यसका साथीहरूबाट छुटकारा पाए पश्चात इस्राईलका सन्तान द्वीप जस्तै स्थान 'सीना' पुगे, त्यहाँ अल्लाह तआलाले आदरणीय मुसा अलैहिस्सलामलाई तौरात दिनको लागि चालीस रातको लागि तूर पर्वतमा बोलायो । आदरणीय मूसा गैसके पश्चात इस्राईलका सन्तानले सामरी पछाडी भइ बाछोको पुजा प्रारम्भ गरिहाले । मनुष्य कति भौतिकीय छ कि अल्लाह तआलाको शक्तिको महान चिन्ह देखे पश्चात र नबीहरू (आदरणीय हारुन र मूसा) का उपस्थितिको बावजूद पनि बाछोलाई आफ्नो देवता ठानिहाले । आजको मुसलमान पनि शिर्कमा लिप्त विश्वास र कर्महरुमा लीन हुँदाहुँदै पनि यो ठान्दछन् कि मुसलमान कसरी मुश्रिक हुनसक्छ ? यी मुसलमानहरूले शिर्कलाई पत्थरका मूर्तिहरूका पूजारीलाई मात्र विशेष गर का छन् कि मात्र उनीहरू नै मुश्रिकहरु हुन्, जबकि यी भनाउँदा मुसलमान पनि चिहान र गुम्बदहरूसित त्यही सबै गरिराखेका छन्, जुनकि पत्थरका पूजारी आफ्ना मूर्तिहरूका साथमा गर्दछन् ।

[2]यो पनि भूमध्यसागर तरिसकेपछिको घटना हो । (इब्ने कसीर) सम्भव छ कि किताब अर्थात् तौरातलाई नै कसीसित सम्बोधित गरिएको छ किनभने हरेक आसमानी (दैवी) पुस्तक सत्य र असत्यलाई विवेक गरिराखेको हुन्छ अथवा चमत्कारलाई कसी भनिएको छ किनभने ईश्वरीय चमत्कार पनि सत्य वा असत्यको पहिचानमा विशेष योगदान दिन्छ ।

عِنۡدَ بَارِئِكُمۡؕ فَتَابَ عَلَيۡكُمۡؕ إِنَّهُۥ هُوَ ٱلتَّوَّابُ ٱلرَّحِيمُ ﴿٥٤﴾

अल्लाह तआला समीप यसैमा छ ।" त उसले तिम्रो तौबा (क्षमा-याचना) स्वीकार गऱ्यो । निःसन्देह त्यही नै स्वीकार गर्नेवाला र दयालु छ ।[1]

وَإِذۡ قُلۡتُمۡ يَٰمُوسَىٰ لَن نُّؤۡمِنَ لَكَ حَتَّىٰ نَرَى ٱللَّهَ جَهۡرَةً فَأَخَذَتۡكُمُ ٱلصَّٰعِقَةُ وَأَنتُمۡ تَنظُرُونَ ﴿٥٥﴾

(५५) र (तिमी त्यसलाई पनि याद गर) तिमीले मूसा (अलैहिस्सलाम) सित भनेका थियौ कि–जबसम्म हामीले आफ्नो प्रभुलाई अगाडी देख्ने छैनौं कदापि विश्वास गर्ने छैनौं । (जुन अवज्ञाको दण्डस्वरुप) तिमीमाथि तिमीले हेर्दाहेर्दै तड़ित (चट्याङ) खस्यो ।[2]

ثُمَّ بَعَثۡنَٰكُم مِّنۢ بَعۡدِ مَوۡتِكُمۡ لَعَلَّكُمۡ تَشۡكُرُونَ ﴿٥٦﴾

(५६) तर फेरि हामीले तिमीलाई मृत्यु पश्चात जीवन यसकारण दियौं ताकि तिमी कृतज्ञता व्यक्त गर ।

---

[1]जव आदरणीय मूसाले शिर्कबाट सावधान गरे, त उनलाई क्षमाको आभास भयो । क्षमाको विधि हत्या भनियो ।

﴿فَاقْتُلُوا أَنفُسَكُمْ﴾ "आपसमा एक-अर्कालाई मार । का दुईटा व्याख्या छन् । एउटा यो कि सबैलाई दुई भागमा विभाजित गरियो र उनीहरूले एक-अर्कालाई मारे । अर्को यो कि शिर्क गर्नेवालाहरूलाई उभ्याइयो र जो त्यसबाट सुरक्षित रहे उनीहरूलाई मार्ने आदेश दिइयो । अतः उनीहरूले हत्या गरे । वधितहरूको संख्या सत्तरी हजार भनिएको छ । (इब्ने क़सीर व फ़तहुल क़दीर)

[2]आदरणीय मूसा अलैहिस्सलाम सत्तरी मानिसहरूलाई लिएर तूर पर्वतमा तौरात लिनको निम्ति गए, जब आदरणीय मूसा अलैहिस्सलाम फर्केर आउनथाले तब उनीहरूले भने कि जबसम्म हामी आफ्नो आँखाले अल्लाह तआलालाई देख्ने छैनौं तबसम्म तिम्रो कुरामा विश्वास गर्न तयार छैनौं, जसको कारण उनीमाथि चट्याङ खस्यो र ती सबै मरिहाले । आदरणीय मूसा अलैहिस्सलाम निकै परेशान भए र उनीहरूको पुनर्जीवनको निम्ति अल्लाहसित प्रार्थना गरे । यसकारण अल्लाहले उनीहरूलाई पुनर्जीवित गऱ्यो । हेर्दाहेर्दै चट्याङ खस्नुको अर्थ यो हो कि प्रथम जसमाथि चट्याङ खस्यो अरु व्यक्तिहरू उसलाई देखिराखेका थिए, यहाँसम्मकि सबै मरिहाले ।

وَ ظَلَّلۡنَا عَلَيۡكُمُ الۡغَمَامَ وَاَنۡزَلۡنَا عَلَيۡكُمُ الۡمَنَّ وَالسَّلۡوٰى ؕ كُلُوۡا مِنۡ طَيِّبٰتِ مَا رَزَقۡنٰكُمۡ ؕ وَمَا ظَلَمُوۡنَا وَلٰكِنۡ كَانُوۡٓا اَنۡفُسَهُمۡ يَظۡلِمُوۡنَ ۝٥٧

(५७) र हामीले तिमीमाथि बादलहरूको छायाँ पार्‍यौं र तिम्रो लागि मन्न व सलवा पठायौं[1] (र भन्यौं) हामीले प्रदान गरेका पवित्र कुराहरू खाऊ । र उनीहरूले हामीमाथि अत्याचार गरेनन् बरु आफूमाथि अत्याचार गरे ।

وَاِذۡ قُلۡنَا ادۡخُلُوۡا هٰذِهِ الۡقَرۡيَةَ فَكُلُوۡا مِنۡهَا حَيۡثُ شِئۡتُمۡ رَغَدًا وَّادۡخُلُوا الۡبَابَ سُجَّدًا وَّقُوۡلُوۡا حِطَّةٌ

(५८) र हामीले तिमीसित भन्यौं कि यस बस्तीमा जाउ ।[2] र जे-जति जहाँबाट चाहन्छौ, धित मर्नेगरी खाउ-पिउ र त्यस द्वारबाट

[1]अधिकतर व्याख्याहरूका अनुसार यो इजिप्ट र सीरियाको मध्यमा स्थित तीहको मैदानको घटनाको वर्णन हो । जब उनीहरू अल्लाहको आदेशको अवज्ञा गरी अमालक: को वस्तीमा प्रवेश गर्नबाट रुके, त दण्डस्वरुप इस्राईलको सन्तान चालीस बर्षसम्म तीहको मैदानमा भौंतारिदैं रहे । कसै-कसैको भनाइ अनुसार यो निश्चित गर्नु उचित छैन । सागर तरे पश्चात सीना नामक मरुस्थलमा पुग्दा जब सर्वप्रथम खाने-पिउने समस्या उत्पन्न भयो त त्यसबेला यो प्रबन्ध गरियो ।

(मन्न) केहीका विचारमा तुरंजबीन हो, वा तुषार, जो वृक्ष अथवा पत्थरमा खस्दा मह समान गुलियो भइहाल्थ्यो र सुकेर गमको समान हुन्थ्यो । केहीका मत अनुसार महको समान गुलियो जल हो । हदीसमा छ कि :

(الكَمأةُ نَوعٌ مِنَ المَنِّ)

"कुम्भी मन्नको त्यो प्रकार हो जुन कि आदरणीय मूसा अलैहिस्सलाममाथि अवतरित गरियो ।" (बुख़ारी तथा मुस्लिम)

यसको अर्थ यो हो कि जुन प्रकारले इस्राईलको सन्तानलाई त्यो भोजन बिना कुनै कष्ट उपलब्ध गराइएको थियो, उसै प्रकार कुम्भी पनि बिना रोपि उत्पन्न हुन्छ । (व्याख्या अहसनुल तफ़सीर) सलवा वट्टाई अथवा एक प्रकारको पंक्षी थियो जो चरा जस्तै हुन्थ्यो र तिनीहरू खाइहाल्थे । (फ़तहुल क़दीर)

[2]त्यस बस्तीबाट तात्पर्य अधिकतर व्याख्याकारहरूको विचारमा 'बैतुल मुक़द्दस' छ ।

نَّغۡفِرۡ لَكُمۡ خَطَٰيَٰكُمۡۚ وَسَنَزِيدُ ٱلۡمُحۡسِنِينَ ﴿٥٨﴾

टाउको निहुराएर प्रवेश गर ।[1] र मुखले भन्दैजाऊ कि, "हामी क्षमा चाहन्छौं ।"[2] हामीले तिम्रा गल्तीहरूलाई क्षमा गरिदिनेछौं र सत्कर्म प्रकट गर्नेहरूलाई झन् अधिक प्रदान गर्नेछौं ।

فَبَدَّلَ ٱلَّذِينَ ظَلَمُواْ قَوۡلًا غَيۡرَ ٱلَّذِي قِيلَ لَهُمۡ فَأَنزَلۡنَا عَلَى ٱلَّذِينَ ظَلَمُواْ رِجۡزٗا مِّنَ ٱلسَّمَآءِ بِمَا كَانُواْ يَفۡسُقُونَ ﴿٥٩﴾

(५९) त्यसपछि ती अत्याचारीहरूले त्यो कुरा जुन उनीसित भनिएको थियो, परिवर्तन गरिहाले ।[3] हामीले पनि ती अत्याचारीहरूमाथि उनीहरूको अवज्ञाको कारण आकाशबाट प्रकोप पठायौं ।[4]

[1]सजद:बाट तात्पर्य केहीले निहुरिएको अवस्थामा प्रवेश हुने कुरोलाई लिएका छन् र केहीले कृतज्ञताको सजद: (ढोक) नै मानेका छन् । तात्पर्य यो हो कि अल्लाह समक्ष कृतज्ञता व्यक्त गर्दै, तुक्षता प्रकट गर्दै र कृतज्ञतालाई स्वीकार गर्दै प्रवेश गर ।

[2] حِطَّةٌ को अर्थ हो, "हाम्रा पापलाई क्षमा गरिदेउ ।"

[3]यसलाई स्पष्टरुपले एउटा हदीसबाट बुझाएको छ, जुनकि सहीह बुखारी एवं मुस्लिम आदिमा छ । नबी सल्लल्लाहु अलैही वसल्लमको भनाइ छ :

«قِيلَ لِبَنِي إِسرائيل ادخُلوْا البابَ سُجَّدا وقولوا حِطَّةٌ – فَدخلوا يَزْحَفُونَ عَلَى أَسْتَاهِهِم فَبَدَّلُوا وَقَالُوا حَبَّةٌ فِي شَعرة»

"उनीहरूलाई आदेश भयो कि सजद: गर्दै प्रवेश गर; तर उनीहरू कम्मर धर्तीमा दल्दै प्रवेश गरे र حِطَّةٌ को सट्टा حَبَّةٌ فى شعرة (अर्थात् गहुँ बालीमा) भन्दै गरे ।"

यसकारण उनीहरूको यस अवज्ञाकारिताको जुन कि उनीहरूमा उत्पन्न भइसकेको थियो र अल्लाहका आदेशहरूलाई परिवर्तित गरी उपहास गर्ने उनीहरूले जुन कुकर्म गरे, ती सबैको अनुमान लगाउन सकिन्छ । सत्यता यो हो कि जब कुनै समुदाय चरित्र र कर्मले पतनतिर जान थाल्दछ त त्यसको व्यवहार अल्लाहका आदेशहरू प्रति यस्तै किसिमको हुन्छ ।

[4]यो आकाशबाट प्रकोप के थियो ? केहीको भनाई अनुसार यो अल्लाहको क्रोध, अधिक तुवाँलो, प्लेग थियो । यस अन्तिम अर्थको पक्ष हदीसबाट प्राप्त हुन्छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

وَاِذِ اسْتَسْقٰى مُوْسٰى لِقَوْمِهٖ فَقُلْنَا اضْرِبْ بِّعَصَاكَ الْحَجَرَ ؕ فَانْفَجَرَتْ مِنْهُ اثْنَتَا عَشْرَةَ عَيْنًا ؕ قَدْ عَلِمَ كُلُّ اُنَاسٍ مَّشْرَبَهُمْ ؕ كُلُوْا وَاشْرَبُوْا مِنْ رِّزْقِ اللّٰهِ وَلَا تَعْثَوْا فِى الْاَرْضِ مُفْسِدِيْنَ ﴿٦٠﴾

(६०) र जब मूसा (अलैहिस्सलाम) ले आफ्नो क़ौम (जाति) को लागि पानी माँगे त हामीले भन्यौं कि आफ्नो लट्ठीले ढुङ्गामा हान, जसबाट बारह जलस्रोतका मूल फूटे ।[1] प्रत्येक समूहले आफ्नो स्रोतको पहिचान गर्‍यो, (र हामीले भन्यौं कि, अल्लाह तआ़लाबाट प्रदान गरिएको अन्न खाउ-पिउ र धर्तीमा आतङ्क मच्चाउँदै न हिंड ।

وَاِذْ قُلْتُمْ يٰمُوْسٰى لَنْ نَّصْبِرَ عَلٰى طَعَامٍ وَّاحِدٍ فَادْعُ لَنَا رَبَّكَ يُخْرِجْ لَنَا مِمَّا تُنْۢبِتُ الْاَرْضُ مِنْۢ بَقْلِهَا وَقِثَّآئِهَا وَفُوْمِهَا وَعَدَسِهَا وَبَصَلِهَا ؕ قَالَ اَتَسْتَبْدِلُوْنَ الَّذِىْ هُوَ اَدْنٰى بِالَّذِىْ هُوَ خَيْرٌ ؕ اِهْبِطُوْا

(६१) र जब तिमीहरूले भन्यौ "हे मूसा (अलैहिस्सलाम) !" हामीले एकै प्रकारको भोजन गरेर संतुष्ट रहन सक्दैनौं । यसकारण आफ्नो प्रभुसित प्रार्थना गर्नुस् कि त्यसले हामीलाई धर्तीमा उत्पन्न साग, कांक्रा (खिरा), गहुँ, मुसुरो र प्याज देओस् । तपाईंले भन्नुभयो कि उत्तम कुरोको

(الطاعُونُ رجز أو عذابٌ أُرسِلَ عَلىٰ بَنِيْ إسْرائيل أوْ عَلىٰ مَنْ كَانَ قَبْلَكُم، فَإذا سَمِعْتُمْ بِه بأرْضٍ فَلَا تَقدمُوا عَلَيْه وَإذا وَقَعَ بِأَرْضٍ وَأَنْتُمْ بِهَا فَلَا تَخرجوا فرارًا منه)

"यो प्लेग त्यही प्रकोप र यातनाको भाग हो जुनकि तिमीभन्दा पहिलेका मानिसहरूमाथि पठाइएको थियो । यदि तिम्रो उपस्थितिमा कुनै स्थानमा प्लेग फैलिन्छ भने तिमी त्यस स्थानबाट न भाग र यदि तिमीलाई कुनै स्थानको विषयमा थाहा हुन्छ कि त्यहाँ प्लेग फैलिएको छ भने त्यहाँ न जाउ ।" (सहीह मुस्लिम, किताबुस्सलाम, अध्याय अत्ताऊन व अत्तीर: व अल-किहाना-हदीस संख्या २२१८)

[1]यो घटना केहीका मत अनुसार 'तीह' को र केहीका विचारमा 'सीना' नामक मरुभूमिको हो । त्यहाँ पानीको आवश्यकता हुँदा अल्लाह तआ़लाले आदरणीय मूसा अलैहिस्सलामसित भन्नुभयो कि आफ्नो लट्ठीले ढुङ्गामा हान । फलस्वरुप पत्थरबाट बारह जलस्रोत फुटेर निस्के । समूह पनि बाह्रै थिए । प्रत्येक समूह आ-आफ्ना जलस्रोतबाट लाभान्वित भयो । यो पनि एउटा चमत्कार थियो, जुनकि अल्लाह तआलाले आदरणीय मूसा अलैहिस्सलामद्वारा देखाउनुभयो ।

مِصْرًا فَإِنَّ لَكُم مَّا سَأَلْتُمْ ۗ وَضُرِبَتْ عَلَيْهِمُ الذِّلَّةُ وَالْمَسْكَنَةُ وَبَاءُو بِغَضَبٍ مِّنَ اللَّهِ ۗ ذَٰلِكَ بِأَنَّهُمْ كَانُوا يَكْفُرُونَ بِآيَاتِ اللَّهِ وَيَقْتُلُونَ النَّبِيِّينَ بِغَيْرِ الْحَقِّ ۗ ذَٰلِكَ بِمَا عَصَوا وَّكَانُوا يَعْتَدُونَ ﴿٦١﴾

सट्टा तुच्छ कुरो किन माँग्दछौ ? त्यसो भए शहरमा जाउ र त्यहाँ तिमीले रुचाउने यी सबै कुरा पाउनेछौ ।[१] उनीमाथि अपमान एवं दरिद्रता पारियो तथा उनीहरू अल्लाहका प्रकोप लिएर फर्के ।[२] यो यसकारण कि उनीहरू अल्लाहका आयतहरूलाई मान्दैनथे र नबीहरूलाई अकारण हत्या गर्दथे ।[३] यो उनीहरूको सीमा उल्लंघनको परिणाम हो ।[४]

---

[१]यो घटना पनि त्यही 'तीह' को मैदानको हो । मिस्रको तात्पर्य इजिप्ट देश होइन बरु कुनै शहर हो । तात्पर्य यो हो कि कुनै शहरमा गइहाल र त्यहाँ कृषि गर । आफ्ना रुचिका तरकारी एवं दालहरु उब्जाउ र खाउ । किनकि उनीहरूको यो माँग उपकारको अनादर थियो, यसकारण वक्रोक्तिको रुपमा भनियो कि "तिम्रा निम्ति त्यहाँ तिमीले मन पराएका कुराहरू छन् ।"

[२]कहाँ ती उपकार र कृपा, जसको विस्तारपूर्वक वर्णन भइसकेको छ र कहाँ त्यो अपमान र दरिद्रता जो कि पछि उनीमाथि थुपारियो र अल्लाहको प्रकोपका कारण भए । प्रकोप पनि कृपाको जस्तै अल्लाहको विशेषता हो, जसको व्याख्या, यातनाको विचार एवं स्वयं यातनासित गर्नुहुँदैन । अल्लाह तआला उनीमाथि क्रोधित भयो । كما هو شأنه

[३]यो अपमान त्यो अल्लाहको प्रकोपको कारणको बर्णन हो । अर्थात् अल्लाह तआलाका आयतहरूको इन्कार र अल्लाहतिर आमन्त्रित गर्नेवाला नबीहरू एवं आमन्त्रण दिनेहरूको हत्या र उनीहरूलाई अपमानित गर्नु अल्लाहको प्रकोपको कारण हो । प्राचीन कालमा यहूदी यो कुकर्म गरी अपमानित एवं दण्डित भए भनेदेखि आज यो कुकर्म गर्नेहरू कसरी सम्मानित हुन सक्छन् । أين ما كانوا وحيث ما كانوا "ती चाहे जो होउन् र जहाँसुकै होउन् ।"

[४]यो अपमान एवं दरिद्रताको दोस्रो कारण हो । عصوا "अवज्ञा गरे" को अर्थ हो कि जुन कर्महरूबाट उनीहरूलाई रोकिएको थियो, त्यसलाई गरे र يعتدون को अर्थ हो कि सीमित कर्महरूमा सीमा उल्लंघन गर्दथे । अनुकरण एवं अनुपालन यो हो कि منهيات बाट टाढा रहुन् र مأمورات लाई यसप्रकार गरून् जुनप्रकारले गर्न आदेश छ । आफ्नो तर्फबाट कमी अथवा अधिकता यो अवज्ञा إعتداء हो, जुन अल्लाहलाई अप्रिय छ ।

(६२) नि:सन्देह मुसलमान होऊन, यहूदी होऊन्[१] र इसाई[२] अथवा साबी,[३] जो कोही पनि अल्लाह तआला एवं केयामतका दिनमा ईमान राख्दछ र सत्कर्म गर्दछ, त्यसको प्रतिदान उसको प्रभुसित छ, र उनलाई न त कुनै भय हुनेछ र न उनी शोकाकुल हुनेछन् ।[४]

إِنَّ الَّذِينَ آمَنُوا وَالَّذِينَ هَادُوا وَالنَّصَارَىٰ وَالصَّابِئِينَ مَنْ آمَنَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَعَمِلَ صَالِحًا فَلَهُمْ أَجْرُهُمْ عِنْدَ رَبِّهِمْ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٦٢﴾

[१]यहूदी هوادة "अर्थात् प्रेम" बाट अथवा تهوّد "अर्थात् पश्चाताप" बाट बनेको छ अर्थात् उनीहरूको यो नाम वास्तवमा प्रायश्चित गर्न अथवा परस्पर प्रेम गर्नुको कारण पऱ्यो । परन्तु मूसा अलैहिस्सलामका अनुयायीहरूलाई यहूदी भन्न थालियो ।

[२]نصارى–نصران को बहुवचन हो, जुन प्रकारले سکاری–سکران को बहुवचन हो। यसको उद्‌गम نصرت हो । आपसमा एक-अर्कालाई सहायता गर्नाको कारण उनीहरूको यो नाम पऱ्यो। उनीहरूका अनुसार पनि भनिन्छ, जस्तो कि उनीहरूले ईसा अलैहिस्सलामसित भनेका थिए–﴿نَحْنُ أَنْصَارُ اللَّهِ﴾ ईसा अलैहिस्सलामका अनुयायीहरूलाई 'नसारा' भनिन्छ, जसलाई इसाई पनि भनिन्छ ।

[३]صائبی–صائبین को बहुवचन हो । यी ती मानिसहरू हुन् जो अवश्य नै प्रारम्भिक कालमा कुनै सत्य धर्मका अनुयायी थिए होलान् । (यसैले कुर्‌आनमा यहूदी, इसाई धर्मको साथमा वर्णन गरिएको छ) । परन्तु पछि उनीहरूमा फरिश्ताहरूको पूजाको प्रचलन भईहाल्यो अथवा यिनीहरू कुनै पनि धर्मका अनुयायी रहेनन् । यसैकारण अधर्मीहरूलाई साबी भन्न थालियो ।

[४]केही आधुनिक व्याख्याकारहरूले यस आयतको भावार्थ गलत सम्झेका छन् र त्यससित उनीहरूले 'एक-धर्मवाद' को विचारलाई संकुचित गर्नुको अर्थ निकालेका छन् । अर्थात् रिसालत-ए-मुहम्मदिया (मुहम्मदको ईश्‌दूतत्व) मा ईमान ल्याउनु (विश्वास गर्नु) आवश्यक मान्दैनन्, अत: जो पनि जुन धर्ममा विश्वास गर्दछ र सत्कर्म गर्दछ, उसलाई मोक्ष प्राप्त भइहाल्नेछ । यो तर्क अलि भ्रमित छ । आयतको उचित व्याख्या यो हो कि जब अल्लाह तआलाले यस आयतका पूर्वका आयतहरूमा यहूदीहरूका कुकर्महरू र सीमा उल्लंघन र त्यसको आधारमा प्रकोपको अधिकारी हुने कुराको वर्णन गऱ्यो, त यो भ्रम उत्पन्न हुनसक्थ्यो कि यहूदीहरूमा जुन मानिसहरू सहीह अल्लाहका किताबका अनुयायी थिए र आफ्ना पैगम्बरका निर्देश अनुसार जीवन व्यतीत गर्नेवाला थिए, उनीहरूसित अल्लाह तआलाले के गऱ्यो ? अथवा के निर्णय लिनेछ ? अल्लाह तआलाले यो स्पष्ट गरिदियो कि यहुदी नै अल्लाहका, आख़िरतको दिनमा विश्वास गरे र सत्कर्म गरिराखे, ती सबैलाई मोक्ष प्राप्त हुनेछ र यसैप्रकार मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) को रिसालतमा ईमान ल्याउने मुसलमान पनि यदि उचितरुपले अल्लाहमा र आख़िरतका

दिनमा विश्वास गर्दछन् र सत्कर्म गर्दछन् भने यिनी पनि अवश्य परलोकका असीम सुखहरूको अधिकारी हुने छन् । मोक्षको विषयमा कसैसित पक्षपात गरिने छैन । त्यहाँ उचित निर्णय हुनेछ चाहे मुसलमान होउन अथवा अन्तिम रसूलभन्दा पहिलाका यहूदी, इसाई र साबी आदि होउन् । यसको समर्थन केही परिभाष हदीसहरूबाट पनि हुन्छ । उदाहरणतः मुजाहिद सलमान फारसी رضى الله عنه बाट उद्धृत गर्दछन्, जसमा उनी भन्दछन् कि "मैले नबी सल्लल्लाहु अलैहि वसल्लमसित ती धार्मिक व्यक्तिहरूको विषयमा सोधें, जो मेरा साथी थिए, इबादत (उपासना) गर्नेवाला र नमाजी थिए । (अर्थात् मुहम्मद सल्लल्लाहु व अलैहि वसल्लमको रिसालतभन्दा पूर्व आफ्ना धर्ममा दृढ थिए ।" तब त्यस अवसरमा यो आयत अवतरित भयो ﴿إِنَّ الَّذِينَ آمَنُوا وَالَّذِينَ هَادُوا﴾ (इब्ने कसीर) । कुर्आन करीमका अरु स्थानहरूबाट पनि अझ समर्थन प्राप्त हुन्छ । उदाहरणतः

﴿إِنَّ الدِّينَ عِندَ اللَّهِ الْإِسْلَامُ﴾

"अल्लाहको निकट धर्म मात्र इस्लाम नै हो ।"

(आले इमरान)

﴿وَمَن يَبْتَغِ غَيْرَ الْإِسْلَامِ دِينًا فَلَن يُقْبَلَ مِنْهُ﴾

"जो इस्लामको अतिरिक्त कुनै अन्य धर्मको अनुयायी हुनेछ, यो कदापि स्वीकार हुने छैन ।" (आले-इमरान ८५)

र हदीसहरूमा पनि नबी सल्लल्लाहु अलैहि वसल्लमले स्पष्ट गरिदिनु भएको छ कि अब मेरो रिसालतमा ईमान नल्याइकन कुनै पनि व्यक्तिलाई मोक्ष प्राप्त हुन सक्दैन । उदाहरणको लागि यो आदेश छः ।

(وَالَّذِي نَفْسِي بِيَدِهِ! لَا يَسْمَعُ بِي رَجُلٌ مِنْ هٰذِهِ الْأُمَّةِ يَهُودِيٌّ وَلَا نَصْرَانِيٌّ ثُمَّ لَا يُؤْمِنُ بِي إِلَّا دَخَلَ النَّارَ)

"कसम छ त्यस अस्तित्वको जसको हातमा मेरो प्राण छ, मेरो यस उम्मत (अनुयायी) मा जो व्यक्ति मेरो विषयमा सुन्दछ, त्यो यहुदी होस् वा इसाई अनि त्यो ममा ईमान ल्याउँदैन भने त्यो नरकमा जानेछ ।" (सहीह मुस्लिम, किताबुल ईमान, अध्याय वजूबुलईमान बिरिसालः नबीय्यीना मुहम्मद صلى الله عليه وسلم

यसको अर्थ यो हो कि एक धर्मवादको सिद्धान्त र त्यसको पथ-भ्रष्टताको कारण जहाँ अन्य कुरआनका आयतहरूलाई छोडिदिनुको नतीजा हो त्यही अहादीस बिना कुरआनलाई सम्झनुको गलत तरीका पनि हो । यसकारण यो भन्नु पूर्णतया सत्य हो कि हदीसबिना कुरआनलाई बुझ्न सकिदैंन ।

وَإِذْ أَخَذْنَا مِيثَاقَكُمْ وَرَفَعْنَا فَوْقَكُمُ الطُّورَ خُذُوا مَا آتَيْنَاكُمْ بِقُوَّةٍ وَاذْكُرُوا مَا فِيهِ لَعَلَّكُمْ تَتَّقُونَ ﴿٦٣﴾

(६३) र जब हामीले तिमीसित वचन लियौं र तिमीमाथि तूर पर्वत ल्याई ठड्याइदियौं ।[1] र भन्यौं–जे हामीले तिमीलाई दिएका छौं, त्यसलाई दृढताले अँगालीराख । र जे-जति त्यसमा छ, त्यसलाई याद गर, ताकि तिमी बच्न सक ।

ثُمَّ تَوَلَّيْتُمْ مِنْ بَعْدِ ذَٰلِكَ ۖ فَلَوْلَا فَضْلُ اللَّهِ عَلَيْكُمْ وَرَحْمَتُهُ لَكُنْتُمْ مِنَ الْخَاسِرِينَ ﴿٦٤﴾

(६४) परन्तु तिमी त्यस पश्चात पनि विमुख भयौ । अनि यदि अल्लाह तआलाको कृपा र दया तिमीमाथि नभएको भए, तिमी हानि बेहोर्नेवाला हुन्थ्यौ ।

وَلَقَدْ عَلِمْتُمُ الَّذِينَ اعْتَدَوْا مِنْكُمْ فِي السَّبْتِ فَقُلْنَا لَهُمْ كُونُوا قِرَدَةً خَاسِئِينَ ﴿٦٥﴾

(६५) र अवश्य नै तिमीलाई उनीहरूको विषयमा ज्ञान पनि छ, जो तिमीहरूमध्ये शनिवारको[2] विषयमा सीमा उल्लंघन गरे र हामीले (पनि) भनिदियौं कि तिमी अपमानित बाँदर भइहाल ।

فَجَعَلْنَاهَا نَكَالًا لِمَا بَيْنَ يَدَيْهَا وَمَا خَلْفَهَا وَمَوْعِظَةً لِلْمُتَّقِينَ ﴿٦٦﴾

(६६) अत: यसलाई हामीले अगाडी र पछाडीका मानिसहरूका लागि सावधान रहनुका कारण बनाइदियौं, र तर्सनेहरूको लागि शिक्षा हो ।

وَإِذْ قَالَ مُوسَىٰ لِقَوْمِهِ إِنَّ اللَّهَ يَأْمُرُكُمْ أَنْ تَذْبَحُوا بَقَرَةً ۖ قَالُوا

(६७) र मूसा (अलैहिस्सलाम) ले जब आफ्ना कौमसित भने कि– अल्लाह तआला

[1]जब तौरातका आदेशहरूका लागि यहूदीहरूले दुष्टतापूर्वक भने कि– हामीबाट त यी आदेशहरूको पालन हुनसक्ने छैन, त अल्लाह तआलाले तूर पर्वतलाई छतको जस्तै उनीहरूमाथि उठाइदियो, जसबाट तर्सेर उनीहरूले पालन गर्न वचन दिए ।

[2] السبت (शनिवार) का दिन यहूदीहरूलाई माछाको शिकार, अपितु कुनै पनि काम गर्नबाट रोकिएको थियो, तर उनीहरूले एउटा वहाना बनाएर अल्लाहको आदेशको सीमा उल्लघंन गरे । शनिवारका दिन (परीक्षाको निम्ति) माछाहरू अधिक आउँथे, उनीहरूले खाल्डो खनिहाले ताकि माछाहरू त्यसमा अल्झिरहुन् र फेरि आइतबारका दिन उनलाई समात्ने गर्दथे ।

أَتَتَّخِذُنَا هُزُوًا ۖ قَالَ أَعُوذُ بِاللَّهِ أَنْ أَكُونَ مِنَ الْجَاهِلِينَ ﴿٦٧﴾

तिमीलाई एउटा गाई[1] ज़िब्ह (बध) गर्नुको आदेश दिन्छ, तब उनीहरूले भने कि "हामीसित किन उपहास गर्दछौ ?" उहाँले (मूसा) उत्तर दिनुभयो कि "म यस्तो मूर्खताबाट अल्लाह तआलाको शरण लिन्छु"

قَالُوا ادْعُ لَنَا رَبَّكَ يُبَيِّنْ لَنَا مَا هِيَ ۚ قَالَ إِنَّهُ يَقُولُ إِنَّهَا بَقَرَةٌ لَا فَارِضٌ وَلَا بِكْرٌ عَوَانٌ بَيْنَ ذَٰلِكَ ۖ فَافْعَلُوا مَا تُؤْمَرُونَ ﴿٦٨﴾

(६८) उनले भने–हे मूसा अलैहिस्सलाम ! अल्लाहसित प्रार्थना गर्नुस कि हामीलाई त्यसको विषयमा भनिदेओस् । उहाँले भन्नुभयो, सुन ! त्यो गाई न त बुढी होस् न बाछी, बरु मध्यम आयुको होस् । अब तिमीलाई जुन आदेश दिइएको छ, त्यसको पालन गर ।

قَالُوا ادْعُ لَنَا رَبَّكَ يُبَيِّنْ لَنَا مَا لَوْنُهَا ۚ قَالَ إِنَّهُ يَقُولُ إِنَّهَا بَقَرَةٌ صَفْرَاءُ فَاقِعٌ لَوْنُهَا تَسُرُّ النَّاظِرِينَ ﴿٦٩﴾

(६९) उनीहरू त्यस पश्चात भन्नथाले कि अल्लाहसित निवेदन गर्नुस् कि त्यसले हामीलाई भनिदेओस् कि त्यसको रङ्ग कस्तो हुनुपर्छ ? उनले भने, त्यो भन्दछ कि गाई सुनौलो, गहिरो, चहकिलो रङ्गको होस्, र हेर्नेहरूलाई प्रसन्न पारिदिने खालको होस् ।

قَالُوا ادْعُ لَنَا رَبَّكَ يُبَيِّنْ لَنَا مَا هِيَ إِنَّ الْبَقَرَ تَشَابَهَ عَلَيْنَا وَإِنَّا إِنْ شَاءَ اللَّهُ لَمُهْتَدُونَ ﴿٧٠﴾

(७०) उनीहरू भन्नथाले कि आफ्नो प्रभुसित निवेदन गरिदिनुस् कि त्यसले हामीलाई खुलस्तरुपले भनिदेओस् कि त्यो कस्तो होस् ? यसप्रकारका धेरै गाईहरू छन् । थाहा हुँदैन, यदि अल्लाहले चाहयो भने हामीलाई मार्गदर्शन प्राप्त हुनेछ ।

قَالَ إِنَّهُ يَقُولُ إِنَّهَا بَقَرَةٌ لَا ذَلُولٌ

(७१) उसले भन्यो कि अल्लाहको आदेश छ कि त्यो गाई कृषि योग्य भूमिमा हलो जोत्न

[1]इस्राईलको सन्तानमा कुनै सन्तान नभएको एउटा मानिस थियो । उसको एकमात्र उत्तराधिकारी उसको भतिजो थियो । एक रात त्यस भतिजोले आफ्नो काकाको हत्या गरी लाश कुनै अर्को मानिसको ढोकामा राखिदियो, वास्तविक हत्याराको खोजिमा उनीहरू एक-अर्कालाई भन्नथाले । अन्तत: कुरो मूसा अलैहिस्सलामसम्म पुग्यो, त उनीहरूलाई एउटा गाई वध गर्ने आदेश भयो । गाईको मासुको एक टुक्राले हानियो, जसबाट त्यो जीवित भइहाल्यो र हत्याराको पहिचान गराउनासाथ मरिहाल्यो । (फ़तहुल क़दीर)

تُثِيرُ الْأَرْضَ وَلَا تَسْقِي الْحَرْثَ ۚ مُسَلَّمَةٌ لَّا شِيَةَ فِيهَا ۚ قَالُوا الْآنَ جِئْتَ بِالْحَقِّ ۚ فَذَبَحُوهَا وَمَا كَادُوا يَفْعَلُونَ ﴿٧١﴾

तथा खेतहरूलाई पानी लगाउने होइन, त्यो स्वस्थ तथा बेदाग होस् । उनीहरूले भने अब तपाईंले स्पष्ट गरिदिनुभयो, तैपनि उनीहरू आदेशहरूका पालन गर्नेवाला थिएनन्, परन्तु त्यसलाई माने तथा गाईको बलि दिए ।[1]

وَإِذْ قَتَلْتُمْ نَفْسًا فَادَّارَأْتُمْ فِيهَا ۖ وَاللَّهُ مُخْرِجٌ مَّا كُنتُمْ تَكْتُمُونَ ﴿٧٢﴾

(७२) तथा जब तिमीले एक व्यक्तिको हत्या गरिदियौ,[2] अनि परस्पर आरोप लगाउन थाल्यौ, तथा अल्लाहले तिम्रो लुकाइएको कुरो प्रकट गर्नु थियो ।

فَقُلْنَا اضْرِبُوهُ بِبَعْضِهَا ۚ كَذَٰلِكَ يُحْيِي اللَّهُ الْمَوْتَىٰ وَيُرِيكُمْ آيَاتِهِ

(७३) अत: हामीले भन्यौं कि त्यस गाईको एक टुक्रा मृतकको शरीरमा बजार (त्यो जीवित हुनेछ) यसैप्रकार अल्लाह तआलाले

[1]उनीहरूसित भनियो कि एउटा गाईलाई वध गर । उनीहरूले कुनै पनि गाई वध गरेको भए अल्लाहको आदेशको पालना भइहाल्ने थियो, तर उनीहरूले अल्लाहको आदेशको पालना गर्नुको सट्टा त्यसमा सूक्ष्मता खोज्न थाले तथा विभिन्न प्रकारका प्रश्न गर्न लागे, जस पश्चात अल्लाह तआला पनि उनीहरूमाथि कठोरता गर्दैरहयो। यसैले धर्ममा गहिराई र कठोरताको मार्ग अपनाउनु मनाही छ ।

[2]यो हत्याको त्यही घटना हो, जसको कारण इस्राईलको सन्तानलाई गाईको बलि चढाउने आदेश दिइएको थियो तथा यसप्रकार अल्लाह तआलाले त्यस हत्याको षडयन्त्रलाई प्रदर्शित गरिदियो, हुन त त्यो हत्या रातको अन्धकारमा मानिसहरूबाट लुकाएर गरिएको थियो । यसको अर्थ यो हो भयो कि तिमी पुण्य तथा कुकर्म चाहे जति लुकाएर गर, अल्लाहको ज्ञानमा हुन्छ तथा अल्लाह तआला त्यसलाई मानिसहरूमाथि प्रदर्शित गर्न सामर्थ्य राख्दछ । यसकारण एकान्त होस् या प्रदर्शन, हर समय र प्रत्येक स्थानमा राम्रै कर्म गर्नेगर, ताकि त्यो कुनै समय मानिसहरूमाथि प्रकट भइहालेको अवस्थामा अपमान नहोस्, अर्थात् त्यसको आदर तथा सम्मानमा बढोत्तरी होस् तथा कुकर्म चाहे जति लुकेर गरियोस्, त्यसको प्रकट हुने सम्भावना छ, जसबाट मनुष्यको अपमान तथा अनादर हुन्छ ।

لَعَلَّكُمْ تَعْقِلُونَ ۝

मृतकलाई जीवित गरी तिम्रो बुद्धिमानीको निम्ति निशानीहरू देखाउँछ ।[1]

ثُمَّ قَسَتْ قُلُوبُكُم مِّن بَعْدِ ذَٰلِكَ فَهِيَ كَالْحِجَارَةِ أَوْ أَشَدُّ قَسْوَةً ۚ وَإِنَّ مِنَ الْحِجَارَةِ لَمَا يَتَفَجَّرُ مِنْهُ الْأَنْهَارُ ۚ وَإِنَّ مِنْهَا لَمَا يَشَّقَّقُ

(७४) अनि त्यस पश्चात तिम्रा हृदय पत्थर जस्तै बरु त्यसभन्दा पनि बढी कठोर भए,[2] केही पत्थरहरूबाट त नहरहरू बगी निस्कन्छन् तथा केही फुट्दछन् एवं त्यसबाट पानी

[1]मृतकको पुन: जीवित हुने आधारमा अल्लाह तआला केयामतका दिन सबै मानिसहरूलाई पुनर्जीवित गर्ने कुराको सामर्थ्यको घोषणा गरिराखेको छ। केयामतका दिन मृतकहरूलाई पुनर्जीवित हुने कुरो, केयामतलाई अस्वीकार गर्नेहरूलाई सधैं आश्चर्यको कारण रहेको छ । यसकारण अल्लाह तआलाले कुरआन करीममा विभिन्न स्थानहरू तथा प्रकार एवं दृष्टिकोणको आधारमा वर्णन गर्नुभएको छ । सूर: अल-बकर:मा नै अल्लाह तआलाले यसको पाँच उदाहरण दिनुभएको छ । एक उदाहरण ﴿ثُمَّ بَعَثْنَاكُم مِّن بَعْدِ مَوْتِكُمْ﴾ (सूर: अल-बकर-५६) मा आइसकेको छ । दोस्रो उदाहरण यही घटना हो । तेस्रो उदाहरण भाग-२ को आयत संख्या २४३ ﴿مُوتُوا ثُمَّ أَحْيَاهُمْ﴾ चौथो उदाहरण आयत संख्या २५९ ﴿فَأَمَاتَهُ اللَّهُ مِائَةَ عَامٍ ثُمَّ بَعَثَهُ﴾ तथा पाँचौ उदाहरण यस पश्चातको आयतमा आदरणीय इब्राहीमका चार पंक्षीहरूको हो ।

[2]अर्थात् पूर्वको चमत्कार तथा वर्तमानको घटना कि मृतक जीवित भइहाल्यो, यसलाई देखेर पनि तिम्रा हृदयमा अल्लाहतिर फर्कने भावना तथा तौबा एवं दोषमुक्तिको लागि क्षमाको भावनाको जागृति भएन बरु यसको विपरीत तिम्रा हृदय पत्थर समान कठोर, बरु त्यसभन्दा पनि बढी कठोर भइहाले । हृदय कठोर हुनु व्यक्ति तथा समाजको लागि सर्वनाश तथा यस कुरोको लक्षण हुन्छ कि हृदयमा प्रभाव पार्ने गुण समाप्त भइसकेको तथा सत्यलाई स्वीकार गर्ने शक्ति समाप्त भइसकेछ । यस पश्चात उसको सुधारको सम्भावना कम भएर जान्छ तथा पूर्ण सर्वनाशको सम्भावनाको बृद्धि हुन्छ । यसकारण ईमानवालाहरूलाई विशेषरुपले चेतावनी दिइएको छ ।

﴿وَلَا يَكُونُوا كَالَّذِينَ أُوتُوا الْكِتَابَ مِن قَبْلُ فَطَالَ عَلَيْهِمُ الْأَمَدُ فَقَسَتْ قُلُوبُهُمْ﴾ [الحديد: ١٦]

ईमानवालाहरू ती मानिसहरू सरह नभईहाल्नु जसलाई उनीभन्दा पूर्व किताब प्रदान गरियो, परन्तु समय व्यतीत भएपछि उनीहरूका हृदय कठोर भइहाले । (सूर: अल-हदीद-१६)

فَيَخْرُجُ مِنْهُ الْمَاءُ ۚ وَإِنَّ مِنْهَا لَمَا يَهْبِطُ مِنْ خَشْيَةِ اللَّهِ ۗ وَمَا اللَّهُ بِغَافِلٍ عَمَّا تَعْمَلُونَ ﴿٧٤﴾

निस्कन्छ,[1] तथा केही अल्लाह तआ़लाको भयले खस्दछन्, तथा तिमी अल्लाह तआ़लालाई आफ्ना कर्महरूबाट अनभिज्ञ नठान ।

أَفَتَطْمَعُونَ أَنْ يُؤْمِنُوا لَكُمْ وَقَدْ كَانَ فَرِيقٌ مِنْهُمْ يَسْمَعُونَ كَلَامَ اللَّهِ ثُمَّ يُحَرِّفُونَهُ مِنْ بَعْدِ مَا عَقَلُوهُ وَهُمْ يَعْلَمُونَ ﴿٧٥﴾

(७५) (हे मुसलमानहरू !) के तिमी आशा राख्दछौ कि तिनीहरू (यहूदी) तिम्रो विश्वास गर्नेछन् जबकि उनीहरूमा यस्ता पनि छन्, जो अल्लाहका कथन सुन्दछन् अनि त्यसलाई बुझेपछि त्यसमा परिवर्तन गरिदिन्छन्, र यस्तो उनीहरू जानी-जानी गर्दछन् ।[2]

وَإِذَا لَقُوا الَّذِينَ آمَنُوا قَالُوا آمَنَّا وَإِذَا خَلَا بَعْضُهُمْ إِلَىٰ بَعْضٍ

(७६) तथा जब ईमानवालाहरूसित भेट्दछन् त आफ्नो ईमान्दारी प्रदर्शित गर्दछन्, तथा जब

[1]पत्थरहरूको कठोरताको उपरान्त, उनीबाट जे-जे लाभ प्राप्त हुन्छ जे-जे अवस्था उनीमाथि व्यतीत हुन्छ, त्यसको वर्णन हो । यसबाट ज्ञात हुन्छ कि पत्थरमा एक प्रकारको गुण तथा भावना उपस्थित छ, जुनप्रकार कि अल्लाह तआ़लाको आदेश छ ।
﴿ تُسَبِّحُ لَهُ السَّمَاوَاتُ السَّبْعُ وَالْأَرْضُ وَمَنْ فِيهِنَّ ۚ وَإِنْ مِنْ شَيْءٍ إِلَّا يُسَبِّحُ بِحَمْدِهِ وَلَٰكِنْ لَا تَفْقَهُونَ تَسْبِيحَهُمْ ﴾
(सूरः बनी इस्राईल, ४४)

[2]ईमानवालाहरूलाई सम्बोधित गरेर यहूदीहरूको विषयमा भनिदैंछ कि के तिमीलाई उनीहरूले ईमान ल्याउने कुराको आशा छ, जबकि वास्तवमा उनका पूर्वजहरूमा एउटा गुट यस्तो थियो कि जो अल्लाहको कथनमा जानी–जानी परिवर्तन (अर्थ तथा शब्दहरूमा) गर्दथ्यो । यो नकारात्मक प्रश्न हो । अर्थात् यस्ता मानिसहरूबाट ईमान ल्याउने अलिकति पनि सम्भावना छैन । यसको अर्थ यो भयो कि जुन मानिसहरू सांसारिक लाभ तथा समूहगत द्वेषका कारण अल्लाहको कथनमा परिवर्तन गर्दछन्, ती मानिस पथ-भ्रष्टताको मार्गको दलदलमा यसप्रकार अल्झदै जान्छन् कि त्यसबाट उम्कन सक्दैनन् । मुसलमानहरूमा कैयन् ज्ञानी आलिम पनि दुर्भाग्यले कुरआन तथा हदीसमा परिवर्तन गर्दछन् । अल्लाह तआ़ला सबैलाई यस अपराधबाट सुरक्षित राखन् ।

[3]यो केही यहूदीहरूका पाखण्डी व्यवहार बारे भनिदैंछ कि उनीहरू मुसलमनहरूमा त आफ्ना ईमानको प्रदर्शन गर्छन्, परन्तु जब भेट्छन् त एक-अर्कामाथि दोषारोपण गर्दछन् कि तिमी मुसलमानहरूलाई आफ्नो किताबका यस्ता कुरा किन भन्दछौ जसबाट रसूल अरबी (सल्लल्लाहु अलैहि वसल्लम) को सत्यताको पुष्टि हुन्छ ।

قَالُوْٓا اَتُحَدِّثُوْنَهُمْ بِمَا فَتَحَ اللّٰهُ عَلَيْكُمْ لِيُحَآجُّوْكُمْ بِهٖ عِنْدَ رَبِّكُمْ ۭ اَفَلَا تَعْقِلُوْنَ ﴿٧٦﴾

आपसमा भेट्छन् त भन्छन् कि मुसलमानहरूसम्म यी कुरा किन पुऱ्याउँछौ जुन अल्लाहले तिमीलाई सिकाउनु भएको छ, के जान्दैनौं कि यो त अल्लाह समक्ष तिमीहरूप्रति तिनका प्रमाण हुनेछन् ।

اَوَلَا يَعْلَمُوْنَ اَنَّ اللّٰهَ يَعْلَمُ مَا يُسِرُّوْنَ وَمَا يُعْلِنُوْنَ ﴿٧٧﴾

(७७) के यिनीहरू जान्दैनन् कि अल्लाह तआला यिनका गुप्त एवं व्यक्त सबै कुरा जान्दछ ।[1]

وَمِنْهُمْ اُمِّيُّوْنَ لَا يَعْلَمُوْنَ الْكِتٰبَ اِلَّآ اَمَانِىَّ وَاِنْ هُمْ اِلَّا يَظُنُّوْنَ ﴿٧٨﴾

(७८) तर उनीहरूमध्ये केही अनपढ यस्ता पनि छन्, जो अभिलाषाहरू बाहेक शास्त्र जान्दैनन् तथा मात्र अनुमान लगाउने गर्छन् ।[2]

فَوَيْلٌ لِّلَّذِيْنَ يَكْتُبُوْنَ الْكِتٰبَ بِاَيْدِيْهِمْ ۤ ثُمَّ يَقُوْلُوْنَ هٰذَا مِنْ عِنْدِ اللّٰهِ لِيَشْتَرُوْا بِهٖ ثَمَنًا قَلِيْلًا ۭ فَوَيْلٌ لَّهُمْ مِّمَّا كَتَبَتْ اَيْدِيْهِمْ

(७९) उनीहरूको लागि सर्वनाश छ, जो आफ्नो हातले लेखेको पुस्तकलाई अल्लाहको शास्त्र भन्दछन्, तथा यसप्रकार संसार (धन) कमाउँछन्, आफ्ना हातले लेखेको कारण

यसप्रकार तिमी स्वयं नै उनीहरूका हातमा यस कुराको प्रमाण दिइराखेका छौ, जुन उनीहरूले तिम्रा विरुद्ध अल्लाहको दरबारमा प्रस्तुत गर्नेछन् ।

[1]अल्लाह तआला भन्नुहुन्छ कि तिमी चाहे भन अथवा नभन अल्लाहलाई त हरेक कुराको ज्ञान छ तथा त्यो तिमीले यी कुरालाई नभने पनि मुसलमानहरूमाथि प्रकट गर्न सक्दछ ।

[2]यो त उनीहरूका पढे-लेखेका मानिसहरूका कुरा थिए, जहाँसम्म उनीहरूका अनपढ मानिसहरूको सम्बन्ध छ, उनीहरू किताब (तौरात) सित त अज्ञान छन्, परन्तु तिनीहरू आशा अवश्य नै गर्दछन्, तथा अनुमानमाथि उनको गुजारा छ, जसमा तिनीहरूलाई तिनका आलिमहरू (पादरीहरू) ले लिप्त गरिदिएका छन् । उदाहरण स्वरुप हामी त अल्लाहकै प्रिय हौं । हामी नरकमा गए पनि त केही समयका लागि मात्र हुन्छ, हामीलाई हाम्रा पूर्वजले दोषमुक्ति प्रदान गराइहाल्ने छन्, आदि-आदि । जस्तो कि आजकलका अनपढ मुसलमानहरूलाई पनि केही आलिम तथा मशायेख (महात्माहरू) ले यस्तै आकर्षित जालमा अल्झाएका छन् ।

وَوَيۡلٞ لَّهُم مِّمَّا يَكۡسِبُونَ ﴿٧٩﴾

उनीहरूको नाश छ, तथा आफ्ना यस कमाईका कारण उनको विनाश छ ।[1]

وَقَالُواْ لَن تَمَسَّنَا ٱلنَّارُ إِلَّآ أَيَّامٗا مَّعۡدُودَةٗۚ قُلۡ أَتَّخَذۡتُمۡ عِندَ ٱللَّهِ عَهۡدٗا فَلَن يُخۡلِفَ ٱللَّهُ عَهۡدَهُۥٓۖ أَمۡ تَقُولُونَ عَلَى ٱللَّهِ مَا لَا تَعۡلَمُونَ ﴿٨٠﴾

(८०) तर उनीहरू भन्दछन् कि हामी त केही दिनमात्र नरकमा रहनेछौं, (उनीहरूसित) भन कि के तिमीले अल्लाह तआलासित कुनै वचन लिएका छौ ?[2] यदि छ भने निःसन्देह अल्लाह तआला आफ्नो वचन भङ्ग गर्नेछैन, अथवा तिमी अल्लाहमाथि ती कुरा लगाउँदछौ, जसलाई तिमी जान्दैनौं ।[3]

[1]यी यहूदीहरूका आलिमहरूका दुस्साहस तथा अल्लाहको भयसित वञ्चित हुने कुराको स्पष्टीकरण हो कि आफ्नै हातले नियम बनाउँदछन् तथा बलपूर्वक यो सिद्ध गर्दछन् कि यो अल्लाहको तर्फबाट हो । हदीसको आधारमा ويل नरकको एउटा घाटीको नाम हो, जसको गहिराई यति छ कि एक काफ़िरलाई त्यसमा खस्न चालीस वर्ष लाग्नेछ । (अहमद, तिर्मिजी, इब्ने हिब्बान तथा अल-हाकिम सह-सन्दर्भ फ़तहुल क़दीर) । केही आलिमहरूले यस आयतबाट कुर्आन मजीदको बिक्रीलाई उचित भनेका छैनन्, परन्तु यो अर्थ सत्य होइन । आयतको उद्देश्य केवल ती मानिसहरूलाई नै भन्नु छ, जो दुनिया कमाउनलाई अल्लाहको कलाममा परिवर्तन गर्दछन् तथा मानिसहरूलाई धर्मको नाममा धोका दिन्छन् ।

[2]यहूदी भन्दथे कि संसारको अस्तित्व मात्र सात हजार वर्षको लागि छ र हामी एक हजार वर्षको सट्टामा एक दिन नरकमा रहने छौं, यसप्रकार मात्र सात दिन नरकमा रहनेछौं । केही भन्दथे कि हामीले चालिस दिन बाछाको पूजा गरेका थियौं, चालिस दिन नरकमा रहनेछौं । अल्लाह तआला भन्नु हुन्छ कि के तिमीले अल्लाहसँग सन्धि गरेका छौ ? यो प्रश्न पनि अस्वीकृत नै छ । अर्थात् यिनीहरू गलत भन्दछन् । अल्लाह तआलासित यसप्रकार कुनै प्रतिबन्ध छैन ।

[3]अर्थात् तिम्रो यो दावी छ कि हामी नरकमा गए पनि मात्र केही दिनका लागि जानेछौं, तिम्रो आफ्नो तर्फबाट हो, तथा यसप्रकार तिमी अल्लाहमाथि यस्ता कुरा लगाउँछौ, जसको ज्ञान तिमीलाई स्वयं छैन । अगाडी अल्लाह तआला आफ्नो त्यो नियम वर्णन गरिराखेको छ जसको आधारमा केयामतको दिन त्यो पुनीतवाला तथा नराम्राहरूलाई उनीहरूका पुण्य तथा कुकर्महरूको दण्ड दिइने छ ।

بَلٰى مَنْ كَسَبَ سَيِّئَةً وَّاَحَاطَتْ بِهٖ خَطِيْٓـَٔتُهٗ فَاُولٰٓئِكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٨١﴾

(८१) नि:सन्देह जसले पनि पाप गऱ्यो तथा त्यसको पापले त्यसलाई घेऱ्यो, त्यो सधैं नरकमा रहनेछ ।

وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ اُولٰٓئِكَ اَصْحٰبُ الْجَنَّةِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٨٢﴾

(८२) तथा जसले ईमान ल्याए एवं सदाचार गरे, तिनीहरू स्वर्गवासी हुन्, जो सधैं त्यसमा रहनेछन् ।[1]

وَاِذْ اَخَذْنَا مِيْثَاقَ بَنِيْٓ اِسْرَآءِيْلَ لَا تَعْبُدُوْنَ اِلَّا اللّٰهَ وَبِالْوَالِدَيْنِ اِحْسَانًا وَّذِي الْقُرْبٰى وَالْيَتٰمٰى وَالْمَسٰكِيْنِ وَقُوْلُوْا لِلنَّاسِ حُسْنًا وَّاَقِيْمُوا الصَّلٰوةَ وَاٰتُوا الزَّكٰوةَ ۗ ثُمَّ تَوَلَّيْتُمْ اِلَّا قَلِيْلًا مِّنْكُمْ وَاَنْتُمْ مُّعْرِضُوْنَ ﴿٨٣﴾

(८३) तथा (स्मरण गर) जब हामीले इस्राईलका पुत्रहरूसित वचन लियौं कि– तिमी अल्लाहबाहेक अन्यको पूजा नगर्नू तथा माता-पितासँग राम्रो व्यवहार गर्नु, तथा त्यसैप्रकार निकटका सम्बन्धिहरू एवं अनाथ तथा निर्धनहरूसित, तथा मानिसहरूलाई राम्रो कुरा भन्नू, नमाज स्थापित गर्नू तथा ज़कात दिंदै गर्नू, परन्तु थोरै मानिसहरू बाहेक तिमी सबै इन्कार गऱ्यौ तथा बिमुख भयौ ।

وَاِذْ اَخَذْنَا مِيْثَاقَكُمْ لَا تَسْفِكُوْنَ دِمَآءَكُمْ وَلَا تُخْرِجُوْنَ اَنْفُسَكُمْ

(८४) तथा (स्मरण गर) जब हामीले तिमीसित वचन लियौं कि तिमी एक-आपसमा रगत न बगाउनु (हत्या नगर्नु)

[1]यहाँ यहूदीहरूको दाबीको खण्डन गर्दै स्वर्ग तथा नरकको नियमको वर्णन भइराखेको छ । जसका कर्महरूको खातामा नराम्रा कुरा मात्र हुन्छन् अर्थात् कुफ्र तथा शिर्क (कि तिनलाई गर्नुको कारण यदि केही राम्रा कर्म गरिएको भएतापनि तिनको पनि महत्व हुनेछैन) त उनीहरू सधैं नरकमा रहनेछन् तथा जो ईमान तथा पुण्यका कार्यहरूसित सुशोभित हुनेछैन्, ती स्वर्गमा निवास गर्नेछन् तथा जो ईमानवाला पाप गर्नेछन्, उनको कुरो अल्लाहको समक्ष हुनेछ, त्यसले चाहेको खण्डमा आफ्नो कृपा तथा दयाले उनीहरूका पापलाई क्षमा गरिदिनेछ अथवा दण्डस्वरुप केही समयको लागि नरकमा राखे पश्चात अथवा नबी सल्लल्लाहु अलैहि वसल्लमको सिफारिशको कारण उनीहरूलाई स्वर्गमा प्रवेश गरिदिनेछ, जस्तो कि यी कुराहरूको पुष्टि सहीह हदीसहरूबाट हुन्छ तथा अहले सुन्नत (कुर्आन र हदीस मान्नेवालाहरुको समुदाय) को विश्वास छ ।

مِّن دِيَارِكُمْ ثُمَّ أَقْرَرْتُمْ وَأَنتُمْ تَشْهَدُونَ ﴿٨٤﴾

तथा आफन्तहरूलाई देशबाट न निकाल्नु, तिमीहरूले स्वीकार गर्‍यौ तथा तिमी त्यसका साक्षी बन्यौ ।[1]

ثُمَّ أَنتُمْ هَٰؤُلَاءِ تَقْتُلُونَ أَنفُسَكُمْ وَتُخْرِجُونَ فَرِيقًا مِّنكُم مِّن دِيَارِهِمْ تَظَاهَرُونَ عَلَيْهِم بِالْإِثْمِ وَالْعُدْوَانِ وَإِن يَأْتُوكُمْ أُسَارَىٰ تُفَادُوهُمْ وَهُوَ مُحَرَّمٌ عَلَيْكُمْ إِخْرَاجُهُمْ ۚ أَفَتُؤْمِنُونَ بِبَعْضِ الْكِتَابِ وَتَكْفُرُونَ بِبَعْضٍ ۚ فَمَا جَزَاءُ مَن يَفْعَلُ ذَٰلِكَ

(८५) तैपनि तिमीले आफन्तका हत्या गर्‍यौ तथा आफ्नो एउटा गुटलाई देशबाट निकाल्यौ तथा पाप एवं कठोरता गर्ने कार्यहरूमा उनीहरूका विरुद्ध अन्यको पक्ष लियौ । हो जब उनीहरू बन्दी बनी तिम्रा पासमा आए त तिमीले उनीहरूको लागि क्षतिपूर्ति दियौ (जसलाई फिदिया भन्दछन्), तर उनीहरूको निष्काशन जुनकि तिमीलाई हराम (अवैध) थियो (त्यसको केही चिन्ता गरेनौ) के तिमी शास्त्रका केही कुराहरू मान्दछौ तथा

[1]यी आयतहरूमा फेरि त्यस वचनको वर्णन गरिदैंछ जुन इस्राईलका पुत्रहरूसित लिइयो तर यसबाट पनि उनीहरूले मुख फर्काए । यस वचनमा प्रथम त एक अल्लाहको पूजाको निम्ति जोड दिइएको छ, जुन प्रत्येक नबीको आधारशीला तथा प्रारम्भिक आमन्त्रण रहेको छ । (जस्तो कि सूर:: अल-अम्बिया आयत संख्या २५ तथा अन्य आयतहरूवाट स्पष्ट छ) यस पश्चात माता-पितासित सदव्यवहारको आदेश छ । अल्लाहको पूजा (इबादत) पश्चात माता-पिताको आज्ञापालन तथा उनीहरूसँग सदव्यवहारवाट स्पष्ट गरिदिइएको छ कि जुनप्रकार अल्लाहको उपासना आवश्यक छ, त्यसै प्रकारले यस पश्चात माता-पिताको आज्ञापालन तथा सेवा पनि अति आवश्यक छ तथा यसमा आलस्य गर्नुको कुनै स्थान छैन । कुर्आनमा विभिन्न स्थानहरूमा अल्लाह तआलाले आफ्नो पूजा पश्चात द्वितीय स्थानमा माता-पिताको आज्ञा पालनको वर्णन गरेर उनको महत्वलाई स्पष्ट गरिदिएको छ । त्यसपश्चात निकट सम्बन्धिहरू, अनाथ तथा निर्धनहरूसँग सदव्यवहारमाथि जोड दिइयो तथा कोमल वचनको आदेश छ । इस्लाममा पनि यी कुराहरूमा जोड दिइएको छ जस्तो कि रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमको हदीसवाट स्पष्ट छ । यस वचनमा नमाज स्थापित गर्नु तथा ज़कात दिनुको पनि आदेश छ, जसबाट ज्ञात हुन्छ कि दुबै उपासनाहरू पूर्वका धर्महरूका नियममा सम्मिलित रहेका छन्, जसबाट यिनको विशेषता परिलक्षित हुन्छ । इस्लाममा पनि यी दुबै उपासनाहरू अति महत्वपूर्ण छन्, यहाँसम्मकि ती मध्येबाट कुनै एकलाई अस्वीकार गर्नु अथवा त्यसवाट विमुख हुनु कुफ्रको समतुल्य मानिएको छ, जस्तो कि आदरणीय अबु-बक्र सिद्दीक़ رضى الله عنه को खिलाफत कालमा ज़कात नतिर्नेहरूको विरुद्ध धर्मयुद्धवाट स्पष्ट छ ।

مِنكُمْ إِلَّا خِزْيٌ فِي الْحَيَوٰةِ الدُّنْيَا ۖ وَيَوْمَ الْقِيَٰمَةِ يُرَدُّونَ إِلَىٰٓ أَشَدِّ الْعَذَابِ ۗ وَمَا اللَّهُ بِغَٰفِلٍ عَمَّا تَعْمَلُونَ ۝٨٥

केही नकार्दछौ ?[1] तिमीमध्ये जो पनि यस्तो गर्दछ, उसको दण्ड यस अतिरिक्त के हुनसक्छ कि संसारमा अपमान (छ) एवं केयामतका दिन कठोर यातनाहरूको मार, तथा अल्लाह तिम्रो कर्मबाट अन्जान (अनभिज्ञ) छैन ।

أُولَٰٓئِكَ الَّذِينَ اشْتَرَوُا الْحَيَوٰةَ الدُّنْيَا بِالْآخِرَةِ ۖ فَلَا يُخَفَّفُ عَنْهُمُ الْعَذَابُ وَلَا هُمْ يُنصَرُونَ ۝٨٦

(८६) यी त्यसता मानिसहरू हुन् जसले सांसारिक जीवनलाई परलोकको सट्टा किनिसकेका छन्, उनका न त यातनाहरू कम हुनेछन्, न उनलाई सहायता गरिने छ ।[2]

[1]नबी करीम सल्लल्लाहु अलैहि वसल्लमका समयमा अन्सार दुई क़बीला (समुदाय) थिए– औस तथा ख़जरज । उनको आपसमा समय-समयमा युद्ध हुने गर्दथ्यो । यसैप्रकार मदीनामा यहूदीहरूका तीन गुठ थिए– बनू कैनुकाअ, बनू नज़ीर तथा बनू क़ुरैज: यिनीहरू पनि आपसमा लड्ने गर्दथे । बनू क़ुरैज़ा औसभित्र थिए तथा बनू कैनुकाअ, बनू नजीर खज़रजभित्र थिए । युद्धमा यिनीहरू आ-आफ्नो मित्रका सहायता गर्दथे तथा आफ्नै सधर्मी यहूदीहरूको हत्या गर्दथे, उनीहरूका घरहरू लुट्थे, तथा उनीहरूलाई देश बाहिर निकालिदिन्थे। जबकि तौरात अनुसार यस्तो गर्नु उनीहरूको निम्ति (अवैध) हराम थियो । परन्तु फेरि ती यहूदीहरूनै जब उनीहरू पराजित भएको कारण बन्दी बन्दथे त फिदिया (अर्थ दण्ड तिर्नु) दिएर छुटाउँथे तथा भन्थे कि तौरातमा हामीलाई यो आदेश दिइएको छ। यी आयतहरूमा यहूदीहरूको यसै कर्मको वर्णन छ कि उनीहरूले धार्मिक नियमहरूलाई मैनको नाक समान बनाइहालेका छन् । कुनै आदेशको पालन गर्दछन् तथा कुनै बेला धार्मिक नियमहरूका आदेशलाई महत्व दिंदैनन् । हत्या, देशनिकाला तथा एक-अर्काको विरुद्ध सहायता गर्नु, उनका धार्मिक नियमहरूमा पनि हराम थियो, यी आदेशहरूको उनीहरूले अवहेलना गरेतथा फिदिया दिएर छोडाइहाल्ने जुन आदेश थियो, त्यसको पालना गरे । यद्यपि प्रथम तीन नियमहरूको पालना गरेको भए, फिदिया दिएर छोडाउने अवसर नै आउन्नथ्यो ।

[2]यो धार्मिक नियमहरूमध्येबाट कुनैको पालना गर्न तथा कुनैको पालना न गर्नाको कारण पाइने दण्डको वर्णन भइराखेको छ । यसको दण्ड संसारमा मान-मर्यादाको स्थानमा (जुन पूर्ण धार्मिक नियमहरूमा पालनाको कारणले प्राप्त हुन्छ) अपमान तथा अनादरबाट परिवर्तित भइहाल्छ तथा आख़िरतमा स्थाई सुखको सट्टा कठोर यातना छ। यसबाट ज्ञात भयो कि अल्लाह कहाँ त्यो आज्ञापालन स्वीकार हुन्छ जुन पूर्णरुपमा हुन्छ। केही कुरा मान्नु अथवा तिनका पालना गर्नुको अल्लाह तआ़ला कहाँ कुनै महत्व छैन ।

(८७) हामीले मूसा (अलैहिस्सलाम) लाई धर्मशास्त्र प्रदान गऱ्यौं र उनी पश्चात लगातार रसूलहरू पनि पठायौं ।[1] तथा हामीले ईसा (अलैहिस्सलाम) बिन मरियमलाई स्पष्ट निशानीहरू प्रदान गऱ्यौं तथा पवित्र आत्मा (आदरणीय जिब्रील) बाट उनको समर्थन गरायौं परन्तु जहिलेपनि तिम्रो पासमा

وَلَقَدْ اٰتَيْنَا مُوْسَى الْكِتٰبَ وَقَفَّيْنَا مِنْۢ بَعْدِهٖ بِالرُّسُلِ ۡ وَاٰتَيْنَا عِيْسَى ابْنَ مَرْيَمَ الْبَيِّنٰتِ وَاَيَّدْنٰهُ بِرُوْحِ الْقُدُسِ ؕ اَفَكُلَّمَا جَآءَكُمْ رَسُوْلٌۢ بِمَا لَا تَهْوٰۤى اَنْفُسُكُمُ اسْتَكْبَرْتُمْ ۚ

यो आयतले हामी मुसलमानहरूलाई पनि विचारको लागि आमन्त्रित गरिराखेको छ कि केही मुसलमानहरूको अपमान तथा अनादरको कारण पनि मुसलमानको त्यही व्यवहार त छैन जुनकि प्रस्तुत आयतमा यहूदीहरूको वर्णन गरिएको छ ?

१﴿وَقَفَّيْنَا مِنْۢ بَعْدِهٖ بِالرُّسُلِ﴾ को अर्थ यो हो कि मुसा अलैहिस्सलाम पश्चात निरन्तर ईशदूत आइरहे, यहाँसम्मकि इस्राईलको वंशमा नबीहरूको यो श्रृङ्खला आदरणीय ईसा अलैहिस्सलाममा समाप्त भइहाल्यो بينات को तात्पर्य चमत्कार हो, जुन आदरणीय ईसा अलैहिस्सलामलाई प्रदान गरियो, जस्तो मृतकलाई जीवित गर्नु, कुष्ठरोगी तथा अन्धोलाई स्वस्थ पार्नु आदि, जसको वर्णन सूरः आले इमरान-४९ मा छ। 'रुहुल कुद्स' अर्थात् पवित्र आत्माबाट तात्पर्य जिब्रीलसित हुन् । उनलाई 'रुहुल कुदुस' यसकारण भनियो कि उनको सृष्टि अल्लाहद्वारा 'कुन' كن शब्द उच्चारणबाट भएको थियो, जस्तो कि स्वयं आदरणीय ईसालाई 'रुह' भनिएको छ, तथा القدس (अल-कुदस) सित अल्लाह तआलाको तात्पर्य छ, तथा उसको साथ 'रुह', शब्दको अधिकता आदरसुचक हो । इब्ने ज़रीरले यसैलाई उचित मान्नु भएको छ किनभने सूरः अल-मायदःको आयत संख्या ११० मा 'रुहुल कुदस' तथा 'इंजील' दुबै अलग-अलग वर्णित छ। (यसकारण 'रुहुल कुदस' बाट इन्जिलको तात्पर्य सहीह हुन सक्दैन) । एक अन्य आयतमा आदरणीय जिब्रीललाई "रुहुल अमीन" भनिएको छ तथा नबी सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय हस्सान رضى الله عنه को सम्बन्धमा भन्नुभएको छः

«اللّٰهُمَّ أَيِّدْهُ بِرُوْحِ الْقُدُسِ»

"हे अल्लाह ! रुहुल कुदुसबाट यसको समर्थन गराउ ।"

एक अन्य हदीसमा छ :

وجبريل معك

"जिब्रील तिम्रा साथमा छन् ।"

यसबाट ज्ञात भयो कि 'रुहुल कुदस' बाट तात्पर्य आदरणीय जिब्रील नै हुन् । (फ़तहुल बयान, इब्ने कसीर, सन्दर्भ, अशरफुल हवाशी)

فَفَرِيقًا كَذَّبْتُمْ وَفَرِيقًا تَقْتُلُونَ ﴿٨٧﴾

रसूलले त्यो कुरा ल्याए, जुन तिम्रा विचार का विरुद्ध थिए, त तिमीले तुरुन्त अभिमान गऱ्यौ, अनि केहीलाई तिमीले झूठा भन्यौ तथा केहीको हत्या गरिहाल्यौ ।[1]

وَقَالُوا قُلُوبُنَا غُلْفٌ ۚ بَل لَّعَنَهُمُ اللَّهُ بِكُفْرِهِمْ فَقَلِيلًا مَّا يُؤْمِنُونَ ﴿٨٨﴾

(८८) तथा उनीहरूले भने कि हाम्रा हृदय ढाकिएका छन्,[2] (त्यसो होइन) बरु तिनीहरूको अधर्मका कारण उनीहरूलाई अल्लाहले धिक्कृत गरिदिएको छ । उनको ईमान लेश मात्र छ ।[3]

وَلَمَّا جَاءَهُمْ كِتَابٌ مِّنْ عِندِ اللَّهِ مُصَدِّقٌ لِّمَا مَعَهُمْ وَكَانُوا مِن قَبْلُ يَسْتَفْتِحُونَ عَلَى الَّذِينَ كَفَرُوا فَلَمَّا جَاءَهُم مَّا عَرَفُوا كَفَرُوا بِهِ ۚ

(८९) तथा जब उनीहरूको पासमा उनको ग्रन्थ (तौरात) लाई प्रमाणित गर्न एउटा शास्त्र (पवित्र कुरआन) आइपुग्यो, यद्यपि यसभन्दा पूर्व यी स्वयं यसका साथ काफिरहरूमाथि विजय चाहन्थे ।[4] त आइसके पश्चात तथा

[1]जस्तो परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम तथा आदरणीय ईसालाई झुठलाए एवं आदरणीय जकरीयाको हत्या गरे ।

[2]अर्थात् हामीमाथि हे मुहम्मद ! (सल्लल्लाहु अलैहि वसल्लम) तिम्रो कुराको कुनै प्रभाव पर्दैन, जस्तो अन्य स्थानमा छ ।

﴿ تُسَبِّحُ لَهُ السَّمَاوَاتُ السَّبْعُ وَالْأَرْضُ وَمَن فِيهِنَّ ۚ وَإِن مِّن شَيْءٍ إِلَّا يُسَبِّحُ بِحَمْدِهِ وَلَٰكِن لَّا تَفْقَهُونَ تَسْبِيحَهُمْ ۗ

"हाम्रा हृदय यस आमन्त्रणबाट पटमा छन्, जसतिर तिमी हामीलाई बोलाउँछौ ।" (फुस्सिलत-५)

[3]हृदयहरूमा सत्य कुराको प्रभाव नपर्नु कुनै गौरवको कुरा होइन । बरु यी निन्दनीय हुने कुराको लक्षण हुन् । अतः उनको ईमान पनि लेश मात्र छ । (जुन अल्लाहकहाँ अस्वीकार छ) । अथवा उनमा ईमान ल्याउनेवाला पनि थोरै मानिसहरू मात्र हुनेछन् ।

[4] يستفتحون को अर्थ यो हो कि, प्रभावशाली तथा विजयको प्रार्थना गर्दथे अर्थात् जब यिनीहरू यहूदी मूर्तिपूजकहरूबाट पराजित हुन्थे त अल्लाहसित प्रार्थना गर्दथे, हे अल्लाह ! अन्तिम नबी शीघ्र पठाउ ताकि उसको साथमा सम्मिलित भई हामी यी मूर्तिपूजकहरूमाथि विजय प्राप्त गरौं । अर्थात् استفتاح को अर्थ استنصار हो । दोस्रो अर्थ सूचना दिनु हो । أي يخبرونهم بأنه سيبعث

فَلَعۡنَةُ اللّٰهِ عَلَى الۡكٰفِرِيۡنَ ﴿٨٩﴾

चिनिसकेपछि त्यसलाई नकारिदिए, अल्लाह (तआ़ला) को धिक्कार होस् काफ़िरहरूमाथि ।

بِئۡسَمَا اشۡتَرَوۡا بِهٖۤ اَنۡفُسَهُمۡ اَنۡ يَّكۡفُرُوۡا بِمَاۤ اَنۡزَلَ اللّٰهُ بَغۡيًا اَنۡ يُّنَزِّلَ اللّٰهُ مِنۡ فَضۡلِهٖ عَلٰى مَنۡ يَّشَآءُ مِنۡ عِبَادِهٖ ۚ فَبَآءُوۡ بِغَضَبٍ عَلٰى غَضَبٍ ؕ وَلِلۡكٰفِرِيۡنَ عَذَابٌ مُّهِيۡنٌ ﴿٩٠﴾

(९०) साह्रै नराम्रो छ त्यो कुरो जसको सट्टा उनीहरूले आफूलाई बेचिदिएका छन्, त्यो उनीहरूबाट कुफ्र गर्नु हो, अल्लाह तआ़लाको तर्फबाट अवतरित शास्त्रको । मात्र यस कुराबाट[1] जलेर कि अल्लाहले आफ्नो कृपा आफ्नो जुन भक्तलाई चाहयो त्यसमाथि उतार्‍यो, यसकारण उनीहरू क्रोधमाथि क्रोधका भागी भए ।[2] र ती काफिरहरूका निम्ति अपमानजनक यातनाहरू छन् ।

وَ اِذَا قِيۡلَ لَهُمۡ اٰمِنُوۡا بِمَاۤ اَنۡزَلَ اللّٰهُ قَالُوۡا نُؤۡمِنُ بِمَاۤ اُنۡزِلَ عَلَيۡنَا وَيَكۡفُرُوۡنَ بِمَا وَرَآءَهٗ ۚ

(९१) तथा जब उनीहरूसित भनियो कि त्यसमाथि विश्वास गर जसलाई अल्लाहले उतारेको छ, त उनीहरूले भने कि जे हामीमाथि (तौरात)

अर्थात् यहूदीहरू काफिरलाई सूचना दिन्थे कि शीघ्र नबी आउने छन् । (फ़तहुल क़दीर) तर आए पश्चात ज्ञान भए उपरान्त पनि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको नबूवतमाथि मात्र द्वेषको भावनाको कारण विश्वास गरेनन्, जस्तो कि पछिल्लो आयतमा छ ।

[1]अर्थात् यस कुराको ज्ञानको पश्चात पनि कि परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम त्यही अन्तिम पैग़म्बर हुन्, जसका विशेषताहरू तौरात तथा इंजीलमा वर्णित छन् तथा जसका कारण नै अहले किताब उनलाई एउटा मुक्ति दाताको रुपमा प्रतीक्षा पनि गरिराखेका थिए तर उनीमाथि मात्र ईर्ष्या तथा द्वेषका कारण विश्वास गरेनन् कि यो नबी हाम्रो वंश मध्येबाट किन भएन जस्तो कि हाम्रो अनुमान थियो । अर्थात् उनको इन्कार तर्कपूर्ण छैन, वंशीय द्वेष, ईर्ष्या तथा कपटमा आधारित छ ।

[2]क्रोधमाथि क्रोधको अर्थ अत्याधिक क्रोध हुन्छ । किनभने बारम्बार उनीहरू क्रोधको कार्य गरिराखे, जस्तो कि विस्तृत वर्णन भइसकेको छ तथा अब मात्र द्वेषका कारण कुरआन तथा परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई इन्कार गरे ।

وَهُوَ الْحَقُّ مُصَدِّقًا لِّمَا مَعَهُمْ ۗ قُلْ فَلِمَ تَقْتُلُونَ أَنۢبِيَآءَ اللَّهِ مِن قَبْلُ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٩١﴾

अवतरित भयो । त्यसमा हाम्रो विश्वास (ईमान) छ,[१] र तिनीहरू त्यसबाहेक (पवित्र कुर्आन) लाई इन्कार गर्दछन्, जबकि त्यो सत्य छ, तिनीहरूको धर्मग्रन्थको पुष्टि गरिराखेको छ । (हे मुहम्मद !) उनीसित भन्नुस कि यदि तिमी आफ्नो ग्रन्थमा विश्वास गर्दछौ भने यसभन्दा पहिला अल्लाहका दूतहरूको हत्या किन गऱ्यौ ?[२]

وَلَقَدْ جَآءَكُم مُّوسَىٰ بِالْبَيِّنَٰتِ ثُمَّ اتَّخَذْتُمُ الْعِجْلَ مِنۢ بَعْدِهِۦ وَأَنتُمْ ظَٰلِمُونَ ﴿٩٢﴾

(९२) तथा तिम्रो पासमा मूसा (अलैहिस्सलाम) यिनै निशानी लिएर आए, तर तैपनि तिमीले बाछोको पूजा गऱ्यौ,[३] तिमी त छौ नै अत्याचारी ।

وَإِذْ أَخَذْنَا مِيثَٰقَكُمْ وَرَفَعْنَا فَوْقَكُمُ الطُّورَ خُذُوا۟ مَآ ءَاتَيْنَٰكُم بِقُوَّةٍ وَاسْمَعُوا۟ ۖ قَالُوا۟ سَمِعْنَا وَعَصَيْنَا وَأُشْرِبُوا۟ فِى قُلُوبِهِمُ الْعِجْلَ

(९३) तथा जब हामीले तिमीसित वचन लियौं र तिमीमाथि तूर पर्वत ठड्यायौं (र भनिदियौं) हामीले प्रदान गरेका कुराहरूलाई सुदृढताले समात, तथा सुन, त उनीहरूले भने हामीले सुन्यौं तथा अवज्ञा गऱ्यौ,[४] तथा

[१]अर्थात् तौरातमा हामी आस्था राख्दछौं । अत: त्यस पश्चात हामीलाई कुर्आनमा विश्वास गर्न आवश्यकता छैन ।

[२]अर्थात् तौरातमा ईमानको दावी पनि सही छैन । यदि तौरातमा तिम्रो ईमान भए त नवीहरूको हत्या तिमीले गर्दैनथ्यौ, यसबाट ज्ञात भयो कि अहिले पनि तिम्रो इन्कार मात्र द्वेष तथा ईर्ष्यामा आधारित छ ।

[३]यो उनीहरूको ईर्ष्या तथा द्वेषको एक अन्य प्रमाण हो कि आदरणीय मूसा अलैहिस्सलाम स्पष्ट निशानीहरू तथा अकाट्य प्रमाण लिएर आए कि उनी अल्लाहका रसूल हुन् तथा पूजाको योग्य मात्र अल्लाह तआला नै छ, तर तिमीले यसपछि आदरणीय मूसा अलैहिस्सलामलाई पनि दुखी पाऱ्यौ तथा एक अल्लाहलाई छाडि बाछोलाई पूज्य बनाइहाल्यौ ।

[४]यो नमान्ने तथा अस्वीकार गर्नेको अन्तिम सीमा हो कि मुखले त स्वीकारे कि सुनिहाल्यौ अर्थात् पालन गर्नेछौ तथा हृदयमा यो विचार कि हामीले के चाहिं यस्तो कर्म गर्नु छ र ?

بِكُفْرِهِمْ ۚ قُلْ بِئْسَمَا يَأْمُرُكُم بِهِۦٓ إِيمَٰنُكُمْ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٩٣﴾

उनीहरूका हृदयमा बाछोको प्रेम भरियो,[1] (बस्यो) उनीहरूको अवज्ञताको कारण ।[2] (उनीहरूसित) भनिदिनुस् कि यदि तिमीहरू ईमानवाला हौ भने कति नराम्रो कर्म छ जसको आदेश तिम्रो ईमानले दिन्छ ।

قُلْ إِن كَانَتْ لَكُمُ ٱلدَّارُ ٱلْءَاخِرَةُ عِندَ ٱللَّهِ خَالِصَةً مِّن دُونِ ٱلنَّاسِ فَتَمَنَّوُا۟ ٱلْمَوْتَ إِن كُنتُمْ صَٰدِقِينَ ﴿٩٤﴾

(९४) (तपाईं) भनिदिनुस् कि यदि अल्लाहका समीप आख़िरतको घर तिम्रै लागि हो अन्य कसैको लागि होइन, भने आउ आफ्नो सत्यताको पुष्टिको लागि मृत्यु माँग ।

وَلَن يَتَمَنَّوْهُ أَبَدًۢا بِمَا قَدَّمَتْ أَيْدِيهِمْ ۗ وَٱللَّهُ عَلِيمٌۢ بِٱلظَّٰلِمِينَ ﴿٩٥﴾

(९५) तर आफ्ना कर्महरूलाई हेर्दा उनीहरूले कहिल्यै पनि मृत्यु माँग्ने छैनन् ।[3] र अल्लाह (तआला) अत्याचारीहरूलाई राम्ररी जान्दछ।

---

[1]एक त प्रेम स्वयं नै यस्तो भाव हो कि मनुष्यलाई अन्धा तथा बहिरा बनाईदिन्छ । दोस्रो यसको أشربوا (पिलाइयो) सित तुलना गरिएको छ किनकि पानी मनुष्यको नसा-नसा तथा शरीरका तन्तुहरूमा दगुर्दछ, जबकि भोज्य पदार्थ यसप्रकार हुँदैन । (फ़तहुल कदीर)

[2]अर्थात् अवज्ञा तथा बाछोको प्रेम तथा पूजाको कारण त्यो कुफ्र थियो, जुनकि उनका हृदयमा बसिसकेको थियो ।

[3]आदरणीय इब्ने अब्बास رضی الله عنه ले यसको व्याख्या मुबाहलाको आमन्त्रणसित गर्नुभएको छ । अर्थात् यहूदीहरूलाई भनियो कि यदि तिमी मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको नबूअतलाई अस्वीकार तथा अल्लाहलाई प्रिय हुने कुरामा साँचो हौ भने मुबाहला गरिहाल । अर्थात् अल्लाहको दरबारमा मुसलमान तथा यहूदी दुबै मिलेर यो प्रार्थना गरून् कि हे अल्लाह ! दुबै मध्ये जो झूठो छ त्यसलाई प्रथम चरणका मृत्यु प्रदान गर, यही मुबाहला उनीहरूलाई सूरः जुमामा पनि दिइएको छ । नज़रान क्षेत्रका इसाईहरूलाई पनि यही आमन्त्रण दिइएको थियो, जस्तो कि सूरः आले-इम्रानमा छ । किनभने यहूदी पनि इसाईहरू सरह झूठा थिए, यसकारण इसाईहरूलाई झैं यहूदीहरूको विषयमा पनि अल्लाह तआलाको आदेश भयो कि यिनी कदापि मृत्युको कामना (अर्थात् मुबाहला) गर्ने छैनन् । हाफिज इब्ने क़सीरले यसै व्याख्यालाई प्राथमिकता दिनु भएको छ । (तफ्सीर इब्ने क़सीर)

وَلَتَجِدَنَّهُمْ أَحْرَصَ النَّاسِ عَلَىٰ حَيَاةٍ وَمِنَ الَّذِينَ أَشْرَكُوا ۚ يَوَدُّ أَحَدُهُمْ لَوْ يُعَمَّرُ أَلْفَ سَنَةٍ وَمَا هُوَ بِمُزَحْزِحِهِ مِنَ الْعَذَابِ أَن يُعَمَّرَ ۗ وَاللَّهُ بَصِيرٌ بِمَا يَعْمَلُونَ ﴿٩٦﴾

(९६) बरु सबभन्दा धेरै संसारिक जीवनलाई माया गर्नेवाला (हे नबी !) तपाईं उनीहरूलाई नै पाउनु हुनेछ, उनीहरू जीवनको लोभमा मुश्रिकहरू (मूर्तिपूजक) भन्दा पनि अधिक छन् ।[1] उनीहरूबाट प्रत्येक व्यक्ति एक-एक हजार वर्षको आयु चाहन्छ, यद्यपि यो आयु प्रदान गरिनु पनि उनीहरूलाई यातनाबाट बचाउन सक्दैन, अल्लाह तआला उनीहरूका कर्मलाई राम्ररी देखिराखेको छ ।

قُلْ مَن كَانَ عَدُوًّا لِّجِبْرِيلَ فَإِنَّهُ نَزَّلَهُ عَلَىٰ قَلْبِكَ بِإِذْنِ اللَّهِ مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ وَهُدًى وَبُشْرَىٰ لِلْمُؤْمِنِينَ ﴿٩٧﴾

(९७) (हे नबी !) तपाईं भनिदिनुस् कि जो जिब्रील (अलैहिस्सलाम) को शत्रु हो, (त त्यो अल्लाहको शत्रु हो) किनभने उनले तपाईंको हृदयमा अल्लाहको सन्देश उतारेका छन्, जुन उनीसितको भएको किताबको पुष्टि गर्ने तथा ईमानवालाहरूको लागि मार्गदर्शन तथा शुभ-सूचना दिनेवाला हो । (त अल्लाह पनि तिनको शत्रु हो)[2]

[1]मृत्युको कामना त टाढाको कुरा, यी त सांसारिक जीवनका, सबै मानिसहरू यहाँसम्मकि मूर्तिपूजकहरू भन्दा पनि अधिक प्रेमी छन्, परन्तु यो दीर्घ आयु पनि उनीहरूलाई यातनाबाट बचाउन सक्ने छैन । यी आयतहरूबाट ज्ञात भयो कि यहूदीहरू आफ्ना ती दावीमा पनि आधारबाटै झूठा थिए कि उनीहरू अल्लाहका प्रिय तथा निकटवर्ती हुन् अर्थात् स्वर्गका मात्र तिनै अधिकारी हुन् तथा अन्य नरकवासी, किनभने वास्तवमा यदि यस्तो भएको भए अथवा कमसेकम उनीहरूलाई आफ्नो दावीको सत्यतामा पूर्ण विश्वास भएको भए उनीहरू अवश्य नै मुवाहला गर्न तयार भइहाल्थे, जसबाट उनको सत्यता स्पष्ट तथा मुसलमानहरूको असत्यता प्रदर्शित हुन्थ्यो, मुबाहलाभन्दा पूर्व यहूदीहरूको विमुख हुनु तथा अस्वीकार गर्नु यस कुरालाई व्यक्त गर्दछ कि यद्यपि उनीहरू मुखले आ-आफ्ना विषयमा प्रसन्नता सूचक कुरा गर्ने गर्दथे, तर उनका हृदय वास्तविकतासित परिचित थिए तथा जान्दथे कि अल्लाहको दरवारमा गईसके पश्चात उनीहरूको परिणाम त्यही नै हुनेछ, जुनकि अल्लाहले आफ्ना अवज्ञाकारीहरूको लागि निर्धारित गरेको छ ।

[2]हदीसहरूमा वर्णित छ कि यहूदीहरूका केही आलिम नबी सल्लल्लाहु अलैहि वसल्लमको पासमा आए तथा भने कि यदि तपाईं सल्लल्लाहु अलैहि वसल्लमले उनीहरूको ठीक उत्तर दिनुभयो भने हामी ईमान ल्याउने छौं किनभने नबी बाहेक उनको उत्तर कसैले दिन सक्दैन । जब उहाँ सल्लल्लाहु अलैहि वसल्लमले

مَن كَانَ عَدُوًّا لِّلَّهِ وَمَلَٰٓئِكَتِهِۦ وَرُسُلِهِۦ وَجِبْرِيلَ وَمِيكَىٰلَ فَإِنَّ ٱللَّهَ عَدُوٌّ لِّلْكَٰفِرِينَ ﴿٩٨﴾

(९८) जो व्यक्ति अल्लाहको तथा त्यसका फरिश्ताहरूको तथा त्यसका रसूलहरू तथा जिब्रील एवं मीकाईलको शत्रु छ त्यसता काफ़िरहरू(अधर्मीहरू) को शत्रु स्वयं अल्लाह छ ।[1]

उनीहरूका प्रश्नका उत्तर ठीक-ठीक दिनुभयो तब उनीहरूले भने कि उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि प्रकाशना (वह्यी) कसले ल्याउँछ ? उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो "जिब्रील" यहूदी भन्नथाले : जिब्रील त हाम्रो शत्रु हो, त्यही त युद्ध, हत्या तथा यातना लिएर अवतरित हुँदै गरेको छ । तथा यस बहानाले उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) लाई मान्नबाट इन्कार गरिहाले । (इब्ने कसीर तथा फ़तहुल क़दीर)

[1]यहूदी भन्ने गर्थे कि मीकाईल हाम्रा मित्र हो । अल्लाह तआ़लाको आदेश भयो कि यी सबै मेरा परम भक्त हुन्, जो उनीहरूको अथवा उनीहरूमध्ये कुनै एउटाको पनि शत्रु छ भने त्यो अल्लाहको शत्रु हो । हदीसमा वर्णित छः

«مَنْ عَادَىٰ لِي وَلِيًّا فَقَدْ بَارَزَنِي بِالْحَرْبِ»

"जसले मेरो कुनै मित्रसित शत्रुता गऱ्यो, उसले मसित युद्धको घोषणा गरिहाल्यो ।" (सहीह बुखारी किताबुल रिकाक़ बाबुल तवाजु)

अर्थात् अल्लाहको कुनै वलीसित शत्रुता सारा औलिया अल्लाहसित बरु अल्लाह तआ़लासित पनि शत्रुता हो । यसबाट स्पष्ट भयो कि औलिया उल्लाहसित प्रेम तथा उनको सम्मान गर्नु अति आवश्यक छ । तथा उनीसित ईर्ष्या तथा द्वेष घोर अपराध हो कि अल्लाह तआ़ला त्यसको विरुद्ध युद्धको घोषणा गरिराखेको छ । औलिया उल्लाह को हुन् ? यसको लागि हेर्नुस् सूरः **यूनुस** आयत संख्या ६२ तथा ६३ तर प्रेम तथा सम्मानको अर्थ यो कदापि होइन कि उनी मरे पश्चात उनका चिहानहरूमा गुम्बद निर्माण गरियून्, उनका कब्रहरूमाथि हरेक वर्ष (वार्षिक) उर्सको नाममा मेलाहरूको आयोजना गरियोस्–उनको नाममा नज़र नियाज़ (भेट) तथा क़ब्रहरूलाई गुस्ल (स्नान) तथा उनीमाथि चादरहरू चढाइयून् तथा उनलाई कष्ट निवारक, चिन्ता-हरण, लाभ-हानि पुऱ्याउने सम्झियोस् । उनीहरूको चिहान छेउ हात जोडेर उभिनु तथा उनको दैलोमा निधार टेकियोस् आदि, जस्तो कि दूर्भाग्यले "औलिया उल्लाहको प्रेम" को नाममा लात व मनातको व्यापार उन्नति गरिराखेको छ । हालाँकि यो प्रेम होइन उनको पूजा हो । जुनकि शिर्क तथा क्रुर अत्याचार हो । अल्लाह तआ़ला यस कब्रको पूजाको षड्यन्त्रबाट सबैलाई सुरक्षित राखून् । (आमीन)

وَلَقَدْ أَنزَلْنَآ إِلَيْكَ ءَايَٰتٍۭ بَيِّنَٰتٍ ۖ وَمَا يَكْفُرُ بِهَآ إِلَّا ٱلْفَٰسِقُونَ ﴿٩٩﴾

(९९) तथा निःसन्देह हामीले तपाईतिर स्पष्ट निशानीहरू पठाएका छौं, जसलाई कुकर्मीहरू बाहेक अन्य कोही अस्वीकार गर्दैन ।

أَوَكُلَّمَا عَٰهَدُوا۟ عَهْدًا نَّبَذَهُۥ فَرِيقٌ مِّنْهُم ۚ بَلْ أَكْثَرُهُمْ لَا يُؤْمِنُونَ ﴿١٠٠﴾

(१००) यिनीहरू जब कुनै बेला वचन दिन्छन् त उनको एउटा न एउटा समूह त्यसलाई भङ्ग गरिदिन्छ । बरू उनीहरूमध्ये अधिकतर ईमानबाट बंचित छन् ।

وَلَمَّا جَآءَهُمْ رَسُولٌ مِّنْ عِندِ ٱللَّهِ مُصَدِّقٌ لِّمَا مَعَهُمْ نَبَذَ فَرِيقٌ مِّنَ ٱلَّذِينَ أُوتُوا۟ ٱلْكِتَٰبَ كِتَٰبَ ٱللَّهِ وَرَآءَ ظُهُورِهِمْ كَأَنَّهُمْ لَا يَعْلَمُونَ ﴿١٠١﴾

(१०१) तथा जुनबेला यिनीहरूको पासमा अल्लाहको कुनै रसूल उनको किताबको पुष्टि गर्न आयो, त यी अहले किताबको (किताब प्रदान गरिएको) एउटा गुटले अल्लाहको किताबलाई यसप्रकार (पिठ्यूँ) पछाडी फ्याँकिदियो मानौं उनीहरू जान्दैनथे ।[1]

وَٱتَّبَعُوا۟ مَا تَتْلُوا۟ ٱلشَّيَٰطِينُ عَلَىٰ مُلْكِ سُلَيْمَٰنَ ۖ وَمَا كَفَرَ سُلَيْمَٰنُ وَلَٰكِنَّ ٱلشَّيَٰطِينَ كَفَرُوا۟ يُعَلِّمُونَ ٱلنَّاسَ ٱلسِّحْرَ وَمَآ أُنزِلَ عَلَى ٱلْمَلَكَيْنِ بِبَابِلَ هَٰرُوتَ

(१०२) तथा त्यसको अनुसरण गर्नथाले जसलाई शैतान, (आदरणीय) सुलैमानको राज्यमा पढ्दथे । सुलैमानले त कुफ्र गरेका थिएनन् बरु यो कुफ्र शैतानहरूको थियो, उनीहरू मानिसहरूलाई जादू सिकाउँदथे ।[2] र बाबुलमा हारुत तथा

[1]अल्लाह तआला नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सम्बोधन गर्दै भन्नुहुन्छ कि हामीले तपाई (सल्लल्लाहु अलैहि वसल्लम) लाई धेरै स्पष्ट निशानीहरू प्रदान गरेका छौं, जसलाई देखेर यहूदीहरूले पनि ईमान ल्याउनु पर्थ्यो । यसको अतिरिक्त स्वयं उनको किताब तौरातमा पनि उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) का विशेषताहरूको वर्णन तथा उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) माथि ईमान ल्याउने वचन विद्यमान छ, परन्तु उनीहरूले पहिला पनि कुन वचनको, कहिले पो चिन्ता गरेका थिए, जो यस वचनको चिन्ता गर्नेछन् ? वचन भङ्ग गर्नु उनको एक गुटको सधैं आचरण रहिआएको छ । यहाँसम्मकि अल्लाहको किताबलाई पनि यसप्रकार पछाडी पारिदिए, मानौं उनीहरू त्यसलाई जान्दैनथे।

[2]अर्थात् यी यहूदीहरूले अल्लाहको किताब तथा वचनको कुनै चिन्ता गरेनन्, परन्तु शैतानहरूका अनुयायी बनेर केवल जादू-टुनाको कार्य मात्र गरेनन् बरु यो दाबी पनि गरे कि आदरणीय सुलैमान अलैहिस्सलाम पनि نعوذ بالله अल्लाहका पैगम्बर थिएनन्, बरु एउटा जादूगर थिए तथा जादूकै शक्तिले राज्य गर्दैरहे । अल्लाह तआलाले

وَمَارُوْتَ ؕ وَمَا يُعَلِّمٰنِ مِنْ اَحَدٍ حَتّٰى يَقُوْلَآ اِنَّمَا نَحْنُ فِتْنَةٌ

मारुत दुई फरिश्ताहरूमाथि जे अवतरित गरिएको थियो[1] यद्यपि ती (फरिश्ताहरू) कसैलाई

भन्नुभयो : आदरणीय सुलैमान अलैहिस्सलाम जादूको कार्य गर्दैनथे किनभने जादूको कार्य त कुफ्र हो, यो कुफ्रको काम आदरणीय सुलैमान अलैहिस्सलाम किन गर्नु हुन्थ्यो ? भन्दछन् कि आदरणीय सुलैमान अलैहिस्सलामको समयमा जादूगरीको कार्य अत्याधिक सामान्यरुपले व्याप्त थियो, आदरणीय सुलैमान अलैहिस्सलामले यसलाई समाप्त गर्नको लागि जादूका किताबहरू लिएर आफ्नो कुर्सी अथवा सिंहासन मुनि पुरिदिएका थिए । आदरणीय सुलैमान अलैहिस्सलामको मृत्यु पश्चात ती शैतानहरू (राक्षसहरू) तथा जादूगरहरूले यी किताबहरूलाई निकालेर न केवल मानिसहरूलाई देखाए बरु उनीहरूलाई यो प्रमाणित गर्ने प्रयत्न पनि गरे कि आदरणीय सुलैमान अलैहिस्सलामको शक्ति तथा राज्यको गुप्त कुरो यही जादूको कार्य थियो तथा यसै आधारमा ती अत्याचारीहरूले आदरणीय सुलैमान अलैहिस्सलामलाई पनि काफ़िर सिद्ध गरिदिए, जसको खण्डन अल्लाह तआलाले गर्नुभयो । (इब्ने कसीर आदि) والله اعلم

[1]केही व्याख्याकारहरूले وما أنزل मा ما नकारात्मक मानेका छन् तथा हारुत एवं मारुतमाथि कुनै कुरालाई अवतरित गरेको कुरो नकारेका छन् । (इब्ने कसीर) यसैप्रकार हारुत एवं मारुतको विषयमा व्याख्यामा इस्राईली कथाहरूको प्रचुरता छ । परन्तु कुनै सहीह प्रमाणित कथन त्यस विषयमा छैन । अल्लाह तआलाले बिना कुनै विस्तारपूर्वक जानकारीको अत्याधिक संक्षिप्तरुपले यस घटनाको वर्णन गर्नुभएको छ । हामीले केवल त्यसमा तथा त्यसै सीमासम्म विश्वास गर्नु पर्दछ । (तफ़सीर इब्ने कसीर) कुरआनका शब्दहरूबाट यो अवश्य ज्ञात हुन्छ कि अल्लाह तआलाले बाबुलमा हारुत एवं मारुत फरिश्ताहरूमाथि जादूको ज्ञान उतारेको थियो तथा यसको उद्देश्य والله اعلم بالصواب यो ज्ञात हुन्छ, ताकि उनीहरू मानिसहरूलाई भनुन् कि नबीहरूका हातद्वारा प्रदर्शित हुने चमत्कार जादूभन्दा भिन्न कुरा हुन् तथा जादू यो कुरो हो जसको ज्ञान अल्लाह तआलाको तर्फबाट हामीलाई प्रदान गरिएको छ । (त्यस समयमा जादू सामान्यरुपले भैराखेका कारण मानिसहरूले नबीहरूलाई पनि نعوذ بالله जादूगर तथा कलाकार ठान्न थालेका थिए) त्यसै सम्भावनाले मानिसहरूलाई बचाउनको लागि परीक्षा स्वरुप फरिश्ताहरूलाई अवतरित गरियो ।

दोस्रो उद्देश्य इस्राईलका सन्तानको चारित्रिक पतनतिर संकेत गर्नु प्रतीत हुन्छ कि इस्राईलका सन्तान कुन प्रकार जादू सिक्नको लागि यी फरिश्ताहरूको पछि लागे तथा यो भने पछि कि जादू कुफ्र हो तथा हामी परीक्षाका लागि आएका हौं, तिनीहरू जादूको शिक्षा पाउनको लागि मरिमेटी राखेका थिए, जसबाट उनीहरूको उद्देश्य सजिलैसँग घरहरूलाई उजाड्नु तथा पति-पत्नीको बीचमा द्वेषका पर्खाल खडा गर्नु थियो । अर्थात् यो उनको गिरावट, बिगाड तथा उपद्रवको निम्ति एक विशेष श्रृङ्खला थियो र यसप्रकारका अन्धविश्वास तथा चरित्रको गिरावट

فَلَا تَكْفُرْ ۖ فَيَتَعَلَّمُونَ مِنْهُمَا مَا يُفَرِّقُونَ بِهِ بَيْنَ الْمَرْءِ وَزَوْجِهِ ۚ وَمَا هُم بِضَارِّينَ بِهِ مِنْ أَحَدٍ إِلَّا بِإِذْنِ اللَّهِ ۚ وَيَتَعَلَّمُونَ مَا يَضُرُّهُمْ وَلَا يَنفَعُهُمْ ۚ وَلَقَدْ عَلِمُوا لَمَنِ اشْتَرَاهُ مَا لَهُ فِي الْآخِرَةِ مِنْ خَلَاقٍ ۚ وَلَبِئْسَ مَا شَرَوْا بِهِ أَنفُسَهُمْ ۚ لَوْ كَانُوا يَعْلَمُونَ ﴿١٠٢﴾

त्यस बेलासम्म सिकाउँदैनथे [१] जबसम्म उनीहरू यो भन्दैनथे कि हामी त एउटा परीक्षा हौं,[२] तिमी कुफ्र नगर अनि मानिसहरू उनीसित त्यो कुरा पति-पत्नीमा विभेद उत्पन्न गर्न सिक्दथे । वास्तवमा उनीहरू अल्लाहको इच्छा बिना कुनै हानि पुऱ्याउन सक्दैनथे ।[३] यिनीहरू त्यो कुरा सिक्दछन्, जुनकि यिनीहरूलाई न हानि पुऱ्याउन सक्दछ तथा न कुनै लाभ, तथा उनी निश्चित रुपमा जान्दछन् कि यसलाई लिनेवालाको आख़िरतमा कुनै भाग छैन । तथा त्यो साह्रै नराम्रो कुरो हो जसको सट्टा उनीहरू आफूलाई विक्रय गरिराखेका छन्, यदि यिनीहरूले बुझेका भए (ठीक मार्ग अपनाउँथे) ।

وَلَوْ أَنَّهُمْ آمَنُوا وَاتَّقَوْا لَمَثُوبَةٌ مِّنْ عِندِ اللَّهِ خَيْرٌ ۖ

(१०३) र यदि यिनीहरू निष्ठावान भएको भए तथा अल्लाहसित भय गरेको भए, अल्लाह (तआला)

कुनै समुदायको बिगाडका लक्षण हुन् । أعاذنا الله منه

[१]यो यस्तै छ जस्तो असत्यको खण्डन गर्नको लागि असत्य धर्मको ज्ञान कुनै गुरुसित प्राप्त गरियोस् । गुरुले शिष्यलाई यस विश्वासका साथ असत्य धर्मको ज्ञान सिकाओस् कि उसले त्यसको खण्डन गर्नेछ, परन्तु ज्ञान प्राप्त गरे पश्चात उ स्वयं अधर्मी भैहालोस् अथवा त्यसको दुरुपयोग गर्छ भने गुरु त्यसमा दोषी हुनेछैन ।

[२]أي إنما نحن ابتلاء واختبار من الله لعباده हामी अल्लाहको तर्फबाट वहाँका भक्तहरूका लागि परीक्षा हौं । (फ़तहुल क़दीर)

[३]यो जादू पनि त्यसवेलासम्म कसैलाई हानि पुऱ्याउन सक्दैन, जबसम्म अल्लाहको आदेश तथा इच्छा हुँदैन । यसैकारण यो सिक्नुको के लाभ छ र ? यही कारण छ कि इस्लाममले जादू सिक्ने तथा प्रयोग गर्ने कुरोलाई कुफ्र भनेको छ । हरेक प्रकारको भलाईको कामना तथा हानिबाट सुरक्षाको लागि केवल अल्लाह तआलासित नै प्रार्थना गर्नुपर्छ किनभने त्यो मात्र प्रत्येक कुरा गर्नेवाला हो तथा सृष्टिको प्रत्येक कार्य उसैको इच्छा अनुसार हुन्छ ।

لَوْ كَانُوا يَعْلَمُونَ ﴿١٠٣﴾

को तर्फबाट राम्रो प्रतिकार प्राप्त हुन्थ्यो, अफसोच ! उनीहरूले जानेको भए ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَقُولُوا رَاعِنَا وَقُولُوا انظُرْنَا وَاسْمَعُوا ۗ وَلِلْكَافِرِينَ عَذَابٌ أَلِيمٌ ﴿١٠٤﴾

(१०४) हे ईमानवालाहरू ! तिमी (नबी सल्लल्लाहु अलैहि वसल्लमलाई) (راعنا) (राइना) (हामीलाई ध्यान दिनुस् अथवा हामीलाई विचार गर्नुस्) नभन्ने गर, अपितु (انظرنا.) (उन्जुर्ना) (हामीतिर हेर्नुस्) भन ।[१] तथा सुन्दैगर एवं काफ़िरहरूलाई दुखदायी यातना रहेको छ ।

مَا يَوَدُّ الَّذِينَ كَفَرُوا مِنْ أَهْلِ الْكِتَابِ وَلَا الْمُشْرِكِينَ أَن يُنَزَّلَ عَلَيْكُم مِّنْ خَيْرٍ مِّن رَّبِّكُمْ ۗ وَاللَّهُ يَخْتَصُّ بِرَحْمَتِهِ مَن يَشَاءُ ۚ وَاللَّهُ ذُو الْفَضْلِ الْعَظِيمِ ﴿١٠٥﴾

(१०५) किताब प्राप्त व्यक्तिहरू (अर्थात् यहूदी तथा ईसाईहरू) मध्ये अस्वीकार गर्नेहरू र बहुदेवबादीहरूले चाहँदैनन् कि तिमीमाथि तिम्रो पालनकर्ताको तर्फबाट कुनै राम्रो कुरा अवतरित होस् । तर अल्लाह (तआला) जसलाई चाहन्छ आफ्नो कृपा विशेषरूपले प्रदान गर्दछ र अल्लाह तआला अत्याधिक कृपाशील छ ।

---

[१](راعنا) को अर्थ हो, हामीलाई विचार गर्नुस् । कुरा नबुझिएको खण्डमा सुन्नेवाला यस शब्दको प्रयोग गरी वक्तालाई आफूतिर आकर्षित गर्दथ्यो, परन्तु यहूदीहरू आफ्नो द्वेष तथा ईर्ष्याको कारण यस शब्दलाई अलिकति बिगारेर प्रयोग गर्दथे, जसले त्यसको अर्थ बदलिन्थ्यो । तथा उनीहरूको द्वेष भावलाई सन्तुष्टि हुन्थ्यो, उदाहरणको लागि, उनीहरू भन्दथे, (راعينا) जसको अर्थ हुन्छ 'हाम्रा चरवाहाहरू'। अथवा (راعنا) को अर्थ छ 'मूर्ख' आदि, जस्तै उनीहरु (السلام عليكم) को सट्टा (السام عليكم) भन्ने गर्थे जसको अर्थ हो, "तिम्रो मृत्यु होस्"। अल्लाह तआलाले आदेश गर्‍यो कि तिमी (انظرنا) भन्ने गर । यसवाट एक त यो कुरा ज्ञात भयो कि यस्ता शब्द जसमा अनादर तथा अपमानको अलिकति पनि आभास हुन्छ भने सम्मान तथा आदर स्वरुप तिनलाई प्रयोग गर्नु उचित छैन । दोस्रो यो कुरो प्रमाणित भयो कि काफ़िरहरूबाट कर्म तथा कथनमा समता गर्नुबाट पन्छियोस्, ताकि मुसलमान

(مَنْ تَشَبَّهَ بِقَوْمٍ فَهُوَ مِنْهُمْ)

(जो कुनै समुदायको समानता गर्नेछ, त्यो उनीहरूमै सम्मिलित हुनेछ) (अबु दाऊद किताबुलिबास) को चेतावनीमा सम्मिलित नहोऊन् ।

مَا نَنسَخْ مِنْ ءَايَةٍ أَوْ نُنسِهَا نَأْتِ بِخَيْرٍ مِّنْهَا أَوْ مِثْلِهَا ۗ أَلَمْ تَعْلَمْ أَنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿١٠٦﴾

(१०६) जुन आयतलाई हामी निरस्त गरिदिन्छौं अथवा बिर्सिदिन्छौं, सट्टामा त्यसभन्दा राम्रो अथवा त्यो जस्तै अन्य ल्याउँछौं,[1] के तिमी जान्दैनौ कि अल्लाह हरेक कुरोको सामर्थ्य राख्दछ ?

[1] نسخ को शाब्दिक अर्थ त "नक्कल" गर्नु हो, तर धार्मिक परिभाषामा एक आदेशलाई निरस्त गरी दोस्रो आदेश पठाउनु हो अथवा अवतरित गर्नु हो । यो परिवर्तन अल्लाह तआलातिरबाट भएको हो जस्तो आदम अलैहिस्सलामको समयमा साखै दाजु-बहिनीमा विवाह मांन्य थियो, पछि यसलाई अवैध गरियो आदि, यसैप्रकार कुर्आनमा पनि अल्लाह तआलाले केही आदेश निरस्त गरी तिनका ठाउँमा नयाँ नियम उतारेका छन् । नस्ख़ (निरस्त) तीन प्रकारको हुन्छ । पहिलो प्रकार यो हो कि एक आदेशलाई परिवर्तन गरेर दोस्रो आदेश उतारियो । दोस्रो हो نسخ مع التلاوة अर्थात् पहिला आदेशका शब्द कुर्आन मजीदमा विद्यमान छन्, तिनलाई पढिन्छ, परन्तु दोस्रो आदेश जो पछि उतारिएको छ, त्यो पनि कुर्आन मजीदमा विद्यमान छ । अर्थात् निरस्त तथा त्यसलाई निरस्त गर्नेवाली दुबै आयतहरू विद्यमान छन् । निरस्तको तेस्रो प्रकार यो हो कि यिनलाई पढ्न निरस्त गरियो । अर्थात् कुर्आनमा नबी सल्लल्लाहु अलैहि वसल्लमले त्यसलाई सम्मिलित गर्नुभएन । परन्तु तिनको आदेश शेष राखिएको छ । जस्त

(الشَّيْخُ وَالشَّيْخَةُ إِذَا زَنَيَا فَارْجُمُوهُمَا الْبَتَّةَ)

"विवाहित पुरुष तथा स्त्री यदि व्यभिचार गर्दछन् भने निःसन्देह उनीहरूलाई ढुङ्गा हानि मृत्युदण्ड दिइयोस् ।" (मुअत्ता ईमाम मलिक)

यस आयतमा निरस्त गर्ने प्रथम दुई प्रकारका वर्णन छन् ।﴿مَا نَنسَخْ مِنْ ءَايَةٍ﴾मा दोस्रो प्रकार तथा﴿أَوْ نُنسِهَا﴾मा पहिलो प्रकार । ننسها "हामी बिर्साइ दिन्छौं ।" को अर्थ हो कि त्यसको आदेश तथा पढ्नु दुबै उठाइहाल्छौं । अर्थात् हामीले त्यसलाई बिर्सिदियौं तथा नयाँ आदेश उतारिदियौं । अथवा नबी सल्लल्लाहु अलैहि वसल्लमको हृदय पटलबाट नै हामीले त्यसलाई मेटाइदियौं तथा त्यो पूर्णरुपले बिर्सिहालियो ।

यहूदी तौरातलाई अपरिवर्तनीय भन्थे तथा कुर्आन माथि पनि उनीहरूले केही आदेशहरू निरस्त भएको कारणले आलोचना गर्दथे । अल्लाह तआलाले उनको खण्डन गरेको छ तथा भनेको छ कि धर्ती तथा आकाशका राज्य केवल उसैका हातमा छन्, त्यसले जे उचित ठान्छ गर्दछ, जुन समय जुन आदेश आफ्नो ज्ञान तथा विवेकको आधारमा नै पारित गर्दछ तथा जसलाई चाहन्छ निरस्त गर्दछ । यो एउटा उसको सामर्थ्यको प्रदर्शन हो । केही प्राचीन परम्परामा भ्रमित भएका (जस्तै अबू मुस्लिम असफाहानी मुतज़ली) तथा आजकलका पनि केही नवीकरण

أَلَمْ تَعْلَمْ أَنَّ اللَّهَ لَهُ مُلْكُ السَّمَٰوَاتِ وَالْأَرْضِ ۗ وَمَا لَكُم مِّن دُونِ اللَّهِ مِن وَلِيٍّ وَلَا نَصِيرٍ ﴿١٠٧﴾

(१०७) के तिमीलाई ज्ञात छैन कि धर्ती तथा आकाशहरूको राज्य अल्लाहकै लागि हो । तथा अल्लाह बाहेक तिम्रो कोही संरक्षक तथा सहायक छैन ।

أَمْ تُرِيدُونَ أَن تَسْأَلُوا رَسُولَكُمْ كَمَا سُئِلَ مُوسَىٰ مِن قَبْلُ ۗ وَمَن يَتَبَدَّلِ الْكُفْرَ بِالْإِيمَانِ فَقَدْ ضَلَّ سَوَاءَ السَّبِيلِ ﴿١٠٨﴾

(१०८) के तिमी आफ्नो रसूलसित त्यसैगरी प्रश्न गर्न चाहन्छौ जस्तो यसभन्दा पूर्व मूसा (अलैहिस्सलाम) सित सोधियो ।[1] (सुन !) जो ईमानलाई कुफ्रमा परिवर्तन गर्छ त्यो सोझो मार्गबाट पथ-विचलित हुनेछ ।

وَدَّ كَثِيرٌ مِّنْ أَهْلِ الْكِتَابِ لَوْ يَرُدُّونَكُم مِّن بَعْدِ إِيمَانِكُمْ كُفَّارًا حَسَدًا مِّنْ عِندِ أَنفُسِهِم مِّن بَعْدِ مَا تَبَيَّنَ لَهُمُ الْحَقُّ ۖ فَاعْفُوا وَاصْفَحُوا حَتَّىٰ يَأْتِيَ اللَّهُ بِأَمْرِهِ ۗ إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿١٠٩﴾

(१०९) यी अहले किताबका अधिकतर मानिस सत्य स्पष्ट भए उपरान्त पनि मात्र ईर्ष्या तथा द्वेषका कारण तिमीलाई पनि ईमानबाट हटाइदिन चाहन्छन्, तिमी पनि क्षमा गर तथा छाडिदेउ यहाँसम्मकि अल्लाह आफ्नो निर्णय लागू गरोस् । अवश्य अल्लाह (तआला) प्रत्येक कार्य गर्न सामर्थ्य राख्दछ ।

وَأَقِيمُوا الصَّلَاةَ وَآتُوا الزَّكَاةَ ۚ وَمَا تُقَدِّمُوا لِأَنفُسِكُم مِّنْ خَيْرٍ تَجِدُوهُ عِندَ اللَّهِ ۗ

(११०) तिमी नमाज़को स्थापना गर तथा ज़कात (धर्मदान) दिँदैगर तथा जुन भलाई (पुण्य) तिमी आफ्नो लागि अगाडी पठाउने छौ त्यो सबै

गर्नेवालाहरूले यहूदीहरू सरह कुरआनमा आदेशहरूको परिवर्तनलाई मान्दैनन् । परन्तु ठीक कुरो त्यही हो जुन उपरोक्त पंक्तिहरूमा वर्णन गरिएका छन्, सदाचारी पूर्वजहरूको विश्वास पनि आदेशहरूलाई परिवर्तित गरिएको पक्षमा नै रहेको छ ।

[1]मुसलमानहरू (सहाबा) लाई चेतावनी दिइराखिएको छ कि तिमी यहूदीहरूको जस्तै आफ्ना ईशदूतसित आफ्नो मनोमानी अनावश्यक प्रश्न गर्ने नगर । यसमा अधर्मको सम्भावना छ ।

إِنَّ ٱللَّهَ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿١١٠﴾

अल्लाहको पासमा पुग्नेछ । नि:सन्देह अल्लाह (तआ़ला) तिम्रा कर्महरूलाई देखिराखेको छ ।[1]

وَقَالُوا لَن يَدْخُلَ ٱلْجَنَّةَ إِلَّا مَن كَانَ هُودًا أَوْ نَصَٰرَىٰ ۗ تِلْكَ أَمَانِيُّهُمْ ۗ قُلْ هَاتُوا بُرْهَانَكُمْ إِن كُنتُمْ صَٰدِقِينَ ﴿١١١﴾

(१११) तथा यिनीहरू भन्दछन् कि स्वर्गमा यहूदी तथा इसाईका अतिरिक्त कोही जाने छैन । यी मात्र उनका आशाहरू हुन् । उनीसित भन कि यदि तिमी साँचो हौ भने कुनै प्रमाण त प्रस्तुत गर ।[2]

بَلَىٰ مَنْ أَسْلَمَ وَجْهَهُ لِلَّهِ وَهُوَ مُحْسِنٌ فَلَهُ أَجْرُهُ عِندَ رَبِّهِ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿١١٢﴾

(११२) सुन ! जसले स्वयंलाई अल्लाहको लागि समर्पित गर्‍यो[3] तथा सदाचारी छ उसैका लागि उसको पोषक कहँ प्रतिफल छ । तथा उनीलाई कुनै भय हुनेछ न त कुनै क्षोभ ।

وَقَالَتِ ٱلْيَهُودُ لَيْسَتِ ٱلنَّصَٰرَىٰ عَلَىٰ شَيْءٍ وَقَالَتِ ٱلنَّصَٰرَىٰ لَيْسَتِ

(११३) यहूदी भन्दछन् इसाई सत्य मार्गमा छैनन्,[4] तथा इसाई भन्दछन् कि यहूदी सत्य



[1]यहूदीहरूलाई इस्लाम धर्म तथा नबी सल्लल्लाहु अलैहि वसल्लमसित जुन ईर्ष्या तथा द्वेष थियो, त्यसको कारण उनीहरू मुसलमानहरूलाई इस्लाम धर्मबाट विमुख गराउने कुराको भरपुर प्रयत्न गरिरहन्थे । मुसलमानहरूलाई भनिदैछ कि तिमी धैर्य तथा क्षमाले काम लिंदै गर, यी आदेश तथा इस्लाम धर्मद्वारा अनिवार्य गरिएका कर्महरू गर्दैरह, जसको तिमीलाई आदेश दिइएको छ ।

[2]यहाँ अहले किताबलाई त्यस गर्व तथा मायाजालमा अल्झिराखेको कुरा पुन: वर्णित गरिदैछ, जसमा उनीहरू लिप्त थिए अल्लाह तआ़लाको आदेश भयो: मात्र उनका आशाहरू छन् जसबारे उनीहरूसित कुनै प्रमाण छैन ।

[3]﴿أَسْلَمَ وَجْهَهُ لِلَّهِ﴾ को अर्थ हो, मात्र अल्लाहको प्रश्नको लागि काम गरोस् तथा﴿وَهُوَ مُحْسِنٌ﴾ को अर्थ हो अन्तिम ईशदूतको सुन्नतको अनुसार । कर्महरूलाई स्वीकार्य भएका यी दुई आधारभूत कुरा हुन् तथा अन्तिम मोक्ष यिनै नियमहरूको अनुसार गरिएका सत्कर्ममा आधारित छन् न कि मात्र आशाहरूमा ।

[4]यहूदी तौरात पढ्दछन् जसमा आदरणीय मूसा अलैहिस्सलामको मुखबाट आदरणीय ईसा अलैहिस्सलामको पुष्टि विद्यमान छ । परन्तु यसका उपरान्त यहूदी आदरणीय ईसालाई अनुकरण गर्दैनथे । इसाईहरूको पासमा इंजील छ, जसमा आदरणीय मूसा तथा तौरातको अल्लाहको तर्फबाट हुने कुराको पुष्टि छ । यसका उपरान्त उनीहरू यहूदीहरूलाई झुठ्लाउँछन् ।

الْيَهُودُ عَلَىٰ شَيْءٍ وَهُمْ يَتْلُونَ الْكِتَابَ ۗ كَذَٰلِكَ قَالَ الَّذِينَ لَا يَعْلَمُونَ مِثْلَ قَوْلِهِمْ ۚ فَاللَّهُ يَحْكُمُ بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ فِيمَا كَانُوا فِيهِ يَخْتَلِفُونَ ﴿١١٣﴾

मार्गमा छैनन् । यद्यपि यिनी तौरात पढ्दछन्, यसैप्रकार यिनीहरूको जस्तै कुरा अशिक्षित पनि भन्दछन् ।[1] केयामतका दिन अल्लाह तिनीहरूको यस मतभेदको निर्णय गर्नेछ ।

وَمَنْ أَظْلَمُ مِمَّن مَّنَعَ مَسَاجِدَ اللَّهِ أَن يُذْكَرَ فِيهَا اسْمُهُ وَسَعَىٰ فِي خَرَابِهَا ۚ أُولَٰئِكَ مَا كَانَ لَهُمْ أَن يَدْخُلُوهَا إِلَّا خَائِفِينَ ۚ

(११४) तथा त्यसभन्दा ठूलो अत्याचरी को छ ? जो अल्लाह (तआला) का मस्जिदहरूमा अल्लाहको वर्णन गर्नुबाट रोक्दछ,[2] तथा उनलाई नष्ट गर्ने प्रयत्न गर्दछ,[3] यस्ता मानिसहरू भयभीत भई त्यसमा प्रवेश गर्नु

यहाँ अहले किताबलाई दुवै गुटका कुफ्र तथा ईर्ष्या एवं आ-आफ्नो विषयमा शुभ आशाहरूमा लिप्त हुने कुरोलाई प्रदर्शित गरिदैछ ।

[1]अहले किताबको अपेक्षा अरबका मूर्तिपूजक अशिक्षित थिए । यसकारण उनीहरूलाई अज्ञानी भनियो । तर उनीहरू पनि मूर्तिपूजक भए पश्चात यहूदी तथा इसाईहरू जस्तै यस असत्य आशाहरूमा लिप्त थिए कि ती नै सत्यतामा छन् । यसैकारण उनीहरू नबी सल्लल्लाहु अलैहि वसल्लमलाई अधर्मी भन्दथे ।

[2]जसले मस्जिदहरूमा अल्लाहको वर्णन गर्नबाट रोके, यी को हुन् ? यिनीहरूको विषयमा व्याख्याकारहरूका दुई मत छन् । एक मत यो हो कि यसबाट तात्पर्य इसाई हुन्, जो रोमका राजासित मिलेर बैतुल मुकद्दसमा यहूदीहरूलाई नमाज़ पढ्नबाट रोके तथा त्यसको विनाशमा भाग लिए । इब्ने जरीर तबरीले यसै मतलाई अपनाउनु भएको छ । तर हाफ़िज इब्ने क़सीरले यसबाट असहमत भई यसको लक्ष्य मक्काका मूर्तिपूजकहरूलाई भन्नुभएको छ, जसले एक त नबी सल्लल्लाहु अलैहि वसल्लम तथा उहाँका सहाबालाई मक्काबाट निष्काशन गर्न बाध्य गरे तथा मुसलमानहरूलाई अल्लाहको घरमा इबादत (उपासना) गर्नबाट रोके । त्यस पश्चात हुदैबियाको सन्धिको बेला यसै व्यवहारको पुनरावृत्ति गरे तथा भने कि हामी आफ्ना पूर्वजका हत्याराहरूलाई मक्कामा प्रवेश गर्न दिने छैनौं, यद्यपि अल्लाहको घरमा कसैलाई इबादत (उपासना) बाट रोक्ने आज्ञा तथा रीति थिएन ।

[3]आतङ्क तथा विनाश मात्र यो होइन कि त्यसलाई विध्वंस पारियोस् तथा भवनलाई हानि पुऱ्याइयोस्, अपितु उनमा अल्लाहको पूजा एवं वर्णन गर्नबाट रोक्नु, धार्मिक नियमहरूको स्थापना तथा शिर्कको प्रदर्शनबाट पवित्र पार्नुबाट मनाही गर्नु पनि आतङ्क तथा अल्लाहका घरहरूलाई बरबाद गर्नु हो ।

لَهُمْ فِي الدُّنْيَا خِزْيٌ وَلَهُمْ فِي الْآخِرَةِ عَذَابٌ عَظِيمٌ ﴿١١٤﴾

पर्दछ,[1] उनीहरूका लागि संसारमा पनि अपमान छ तथा परलोकमा पनि ठूला-ठूला यातनाहरू छन् ।

وَلِلَّهِ الْمَشْرِقُ وَالْمَغْرِبُ ۚ فَأَيْنَمَا تُوَلُّوا فَثَمَّ وَجْهُ اللَّهِ ۚ إِنَّ اللَّهَ وَاسِعٌ عَلِيمٌ ﴿١١٥﴾

(११५) तथा पूर्व एवं पश्चिमको मालिक अल्लाह नै हो । तिमी जता मुख फर्काउँछौ, त्यतै अल्लाहको मुख छ,[2] अल्लाह (तआ़ला) परम शक्तिशाली सर्वज्ञ छ ।

وَقَالُوا اتَّخَذَ اللَّهُ وَلَدًا ۗ سُبْحَانَهُ ۖ بَل لَّهُ مَا فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۖ كُلٌّ لَّهُ قَانِتُونَ ﴿١١٦﴾

(११६) तथा यिनीहरू भन्दछन् कि अल्लाह (तआ़ला) को सन्तान छ (होइन बरु) त्यो पवित्र छ । धर्ती एवं आकाशहरूको सम्पूर्ण सृष्टिमाथि

[1]यी शब्द सूचना सम्बन्धि हुन् परन्तु यसबाट तात्पर्य (यसबाट) यो इच्छा हो कि जब अल्लाह तआ़ला तिमीलाई प्रभावशाली तथा विजयी बनाउँछ भने तिमी यी मूर्तिपूजकहरूलाई यसमा सन्धि तथा सुरक्षा नगरीकन रहने आज्ञा नदिनू । अत: जब ८ हिज़रीमा मक्का विजयी भयो त नबी सल्लल्लाहु अलैहि वसल्लमले घोषणा गर्नुभयो कि आउँदो वर्ष काअ़बामा कुनै मूर्तिपूजकलाई हज गर्ने तथा नाङ्गो परिक्रमा गर्ने अनुमति हुनेछैन । तथा जोसित जे सन्धि छ, सन्धिको अवधिसम्म उसलाई रहने आज्ञा छ । केहीले भनेका छन् कि यसमा शुभ-सूचना तथा भविष्यवाणी छ कि निकट भविष्यमा मुसलमानहरूलाई विजय प्राप्त हुनेछ तथा यी मूर्तिपूजक खा़ने काअ़बामा भयभीत भई प्रवेश गर्नेछन् कि हामीले मुसलमानहरूमाथि जुन पहिले अत्याचार गरेका थियौ, तिनको बदलामा हामीले दण्ड अवश्य पाउनेछौं अथवा हत्या नगरियोस् । अत: शीघ्र नै यो शुभ-सूचना पूरा भइहाल्यो ।

[2]हिज़रत पश्चात जब मुसलमान 'बैतुल मुक़द्दस' तिर मुख फर्काइ नमाज़ पढ्ने गर्दथे, तब मुसलमानहरूलाई यसको दु:ख थियो, यस अवसरमा यो आयत अवतरित भयो । केहीको भनाई छ कि यो आयत त्यसबेला अवतरित भयो जब 'बैतुल मुक़द्दस' बाट फेरि खा़ने काअ़बातिर मुख फर्काउने आदेश भयो त यहूदीहरूले नाना प्रकारका मनगढन्त कुरा गरे, केहीको निकट यसको अवतरणको कारण यात्रामा सवारीमाथि ऐच्छिक (नफिल) नमाज़हरू पढ्ने आज्ञा प्रदान भयो कि सवारीको मुख जता भएपनि, नमाज़ पढ्न सक्छौ । कहिले केही कारण एकत्रित भइहाल्छन् तथा ती सबैको आदेशको लागि एउटै आयत अवतरित भएको छ । यस्ता आयतहरूका लागि विभिन्न कथन एकत्रित हुन्छन्, कुनै कथनमा एउटा अवतरित हुने कारणको वर्णन हुन्छ तथा कुनैमा अन्य । यो आयत पनि यसैप्रकारको हो । (अहसनुल तफ़सीर)

त्यसको अधिपत्य छ तथा प्रत्येक उसको आज्ञाकारी छ ।

بَدِيعُ السَّمٰوٰتِ وَالْاَرْضِ ۖ وَاِذَا قَضٰٓى اَمْرًا فَاِنَّمَا يَقُوْلُ لَهٗ كُنْ فَيَكُوْنُ ۝١١٧

(११७) त्यो आकाशहरू एवं धर्तीको स्रष्टा हो, तथा त्यो जुन कार्यको निर्णय गर्दछ भनिदिन्छ कि भइहाल, त्यो भइहाल्छ ।[1]

وَقَالَ الَّذِيْنَ لَا يَعْلَمُوْنَ لَوْلَا يُكَلِّمُنَا اللّٰهُ اَوْ تَاْتِيْنَآ اٰيَةٌ ۗ كَذٰلِكَ قَالَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ مِّثْلَ قَوْلِهِمْ ۗ تَشَابَهَتْ قُلُوْبُهُمْ ۗ قَدْ بَيَّنَّا الْاٰيٰتِ لِقَوْمٍ يُّوْقِنُوْنَ ۝١١٨

(११८) तथा यसैप्रकार अज्ञानी मानिसहरूले पनि भने कि स्वयं अल्लाह (तआला) हामीसित कुरा किन गर्दैन अथवा हाम्रो पासमा कुनै निशानी किन आउँदैन, यसैप्रकार यस्तै कुरा[2] उनका पूर्वजहरूले पनि भनेका थिए, उनीहरूका तथा यिनीहरूका हृदय एकै प्रकारका भएका छन्,[3] हामीले त विश्वास गर्नेहरुका लागि निशानीहरुको वर्णन गरिदियौं ।

[1]अर्थात् अल्लाह त त्यो हो जो कि आकाश तथा धर्तीका प्रत्येक कुराको स्वामी हो । प्रत्येक वस्तु उसैको आज्ञाकारी छ । बरु आकाश तथा धर्तीका बिना कुनै नमूना वनाउनेवाला पनि त्यही हो । त्यसको अतिरिक्त जो काम चाहन्छ, त्यसको लागि त्यसलाई केवल एउटा स्पष्ट शब्द 'भइहाल' भन्नु काफ़ी छ । यस्तो शक्तिको लागि सन्तानको के आवश्यकता हुनसक्दछ ।

[2]यसबाट तात्पर्य अरबका मूर्तिपूजक हुन्, जसले यहूदीहरू जस्तै माँग गरे कि अल्लाह तआला सीधा हामीसित कुरा किन गर्दैन अथवा कुनै ठूलो निशानी किन देखाउँदैन जसलाई देखेर हामी मुसलमान भइहालौं ? जुन प्रकारले सूर: बनी इस्राईल आयत संख्या ९० देखि ९३ सम्म तथा अन्य स्थानहरूमा पनि वर्णन गरिएको छ ।

[3]अर्थात् अरबका मूर्तिपूजकहरूका हृदय कृतघ्नता, ईर्ष्या, द्वेष, विरोध तथा हटमा आफ्ना पूर्वका मानिसहरूका हृदय सरह भइहाले । जस्तो सूर: जारीयातमा आदेश छ :

﴿كَذٰلِكَ مَآ اَتَى الَّذِيْنَ مِنْ قَبْلِهِمْ مِّنْ رَّسُوْلٍ اِلَّا قَالُوْا سَاحِرٌ اَوْ مَجْنُوْنٌ ۝ اَتَوَاصَوْا بِهٖ ۚ بَلْ هُمْ قَوْمٌ طَاغُوْنَ﴾

"यिनीभन्दा पूर्व जो पनि रसूल आयो उसलाई मानिसहरूले जादूगर तथा दिवाना नै भने । के यिनीहरूले त्यस कुराको एक-अर्कालाई वसीयत गरेर जाने गर्थे ? होइन यी सबै उद्दण्ड हुन् ।"

إِنَّآ أَرۡسَلۡنَٰكَ بِٱلۡحَقِّ بَشِيرٗا وَنَذِيرٗاۖ وَلَا تُسۡـَٔلُ عَنۡ أَصۡحَٰبِ ٱلۡجَحِيمِ ١١٩

(११९) हामीले तपाईंलाई सत्यका साथ शुभ-संदेशवाहक तथा सावधान कर्ता बनाएर पठाएका छौं तथा नरकवासीहरूको विषयमा तपाईंसित सोधिने छैन ।

وَلَن تَرۡضَىٰ عَنكَ ٱلۡيَهُودُ وَلَا ٱلنَّصَٰرَىٰ حَتَّىٰ تَتَّبِعَ مِلَّتَهُمۡۗ قُلۡ إِنَّ هُدَى ٱللَّهِ هُوَ ٱلۡهُدَىٰۗ وَلَئِنِ ٱتَّبَعۡتَ أَهۡوَآءَهُم بَعۡدَ ٱلَّذِي جَآءَكَ مِنَ ٱلۡعِلۡمِ مَا لَكَ مِنَ ٱللَّهِ مِن وَلِيّٖ وَلَا نَصِيرٍ ١٢٠

(१२०) तथा तपाईंसित यहूदी तथा इसाई कदापि प्रसन्न हुने छैनन्, जबसम्म तपाईं उनको धर्मको अनुसरण गर्नुहुन्न,[1] (तपाईं) भनिदिनुस् कि अल्लाहको मार्गदर्शन नै मार्गदर्शन हुन्छ,[2] तथा यदि तपाईंले आफ्नो पासमा ज्ञान आइपुगे पश्चात पनि उनीहरूको इच्छाको अनुकरण गर्नुभयो, भने अल्लाह समक्ष न त तपाईंको कोही संरक्षक हुनेछ न कोही सहायक ।[3]



अर्थात् लगभग ती सबैमा समानरुपले उद्दण्डता थियो, यसकारण सत्यतिर आमन्त्रित गर्नेवालाहरूका समक्ष नयाँ-नयाँ माँगहरू राख्दछन् अथवा उनीहरूलाई दीवाना भन्दछन् ।

[1]अर्थात् यहूदी तथा इसाई धर्म स्वीकार गरिहालून् ।

[2]जो अब इस्लाम धर्मको रुपमा छ, जसको आमन्त्रण नबी सल्लल्लाहु अलैहि वसल्लम दिइराख्नु भएको छ, न कि परिवर्तित रुपमा यहूदी तथा इसाई धर्म ।

[3]यो यस कुरामा चेतावनी हो कि ज्ञान आइसके पश्चात पनि यदि मात्र ती स्वयं गलत मानिसहरूलाई प्रसन्न गर्नको लागि उनको अनुकरण गरियो भने तिम्रो कोही सहायता गर्नेवाला हुनेछैन । यो वास्तवमा मुसलमानहरूलाई शिक्षा दिईदैछ कि आधुनिकीकरण गर्नेवाला तथा गलत मानिसहरूलाई प्रसन्न गर्नको लागि उनी पनि यस्ता काम नगरून, न धर्ममा वाकपटुता तथा त्रुटिपूर्ण तर्कका कार्य गरून् ।

ٱلَّذِينَ ءَاتَيۡنَٰهُمُ ٱلۡكِتَٰبَ يَتۡلُونَهُۥ حَقَّ تِلَاوَتِهِۦٓ أُوْلَٰٓئِكَ يُؤۡمِنُونَ بِهِۦۗ وَمَن يَكۡفُرۡ بِهِۦ فَأُوْلَٰٓئِكَ هُمُ ٱلۡخَٰسِرُونَ ﴿١٢١﴾

(१२१) जसलाई हामीले किताब दियौं,[1] तथा उनीहरू त्यसलाई त्यसरी पढ्दछन् जस्तो कि पढ्ने हक छ,[2] उनीहरू यस किताबमा पनि ईमान (विश्वास) राख्दछन् तथा जो यसप्रति विश्वास गर्दैनन् उनीहरू नै आफ्नो नोक्सानी गर्दछन् ।[3]

يَٰبَنِيٓ إِسۡرَٰٓءِيلَ ٱذۡكُرُواْ نِعۡمَتِيَ ٱلَّتِيٓ أَنۡعَمۡتُ عَلَيۡكُمۡ وَأَنِّي فَضَّلۡتُكُمۡ عَلَى ٱلۡعَٰلَمِينَ ﴿١٢٢﴾

(१२२) हे याकूबका पुत्रहरु ! मैले तिमीमाथि जुन अनुकम्पाहरू गरे, तिनलाई याद गर तथा यो पनि कि मैले तिमीलाई सम्पूर्ण समुदायहरूमा श्रेष्ठता प्रदान गरेको थिएँ ।

وَٱتَّقُواْ يَوۡمٗا لَّا تَجۡزِي نَفۡسٌ عَن نَّفۡسٖ شَيۡـٔٗا وَلَا يُقۡبَلُ مِنۡهَا عَدۡلٞ وَلَا تَنفَعُهَا شَفَٰعَةٞ

(१२३) तथा त्यस दिनसित तर्स जुन दिन कोही व्यक्ति कुनै व्यक्तिलाई कुनै लाभ पुऱ्याउने सक्ने छैन, न कुनै व्यक्तिबाट कुनै अर्थदण्ड

[1]अहले किताबका दुष्ट मानिसहरूका दुश्चरित्र एवं व्यवहारको आवश्यक वर्णन गरे पश्चात उनीहरूमा जो कोही पुण्यका कार्य गर्नेवाला तथा सदाचारी थिए, यस आयतमा उनका गुणहरू तथा उनका ईमानवाला हुने कुराको सूचना दिइँदैछ । यिनीहरूमा अब्दुल्लाह बिन सलाम तथा उनीजस्तै अन्य व्यक्ति छन् जसलाई यहूदीहरू मध्येबाट इस्लाम धर्म स्वीकार गर्ने सौभाग्य प्राप्त भयो ।

[2]"उनीहरु यसप्रकार पढ्दछन्, जुन प्रकार पढ्ने अधिकार छ ।" का कैयन् अर्थ वर्णित गरिएका छन् । जस्तै :-(१) "ध्यानपूर्वक पढ्दछन् ।" जब स्वर्गको वर्णन आउँछ तब स्वर्गको कामना गर्दछन् तथा नरकको वर्णन आउँछ भने त्यसबाट सुरक्षित रहने प्रार्थना गर्दछन् । (२) यसको हलाललाई हलाल, हरामलाई हराम ठान्दथे तथा अल्लाहको कथनलाई परिवर्तित गर्दैनथे । जस्तो अन्य यहूदीहरूले गर्दथे । (३) त्यसमा जे-जति लेखिएको छ, मानिसहरूलाई भन्दछन्, त्यसको कुनै कुरा लुकाउँदैनन्। (४) यसका स्पष्ट आदेशित कुराहरूका अनुसार कर्म गर्दछन्, अस्पष्ट कुराहरूमा ईमान राख्दछन् तथा जुन कुरा बुझ्दैनन्, तिनलाई आलिमहरूबाट हल (समाधान) गराउँछन् । (५) यसको एक-एक कुराको पालना गर्दछन् । (फ़तहुल क़दीर) वास्तविकता यो हो कि पढ्ने अधिकार क्षेत्रमा यी सम्पूर्ण भावार्थहरूको समावेश छ तथा मार्ग-दर्शन यस्ता मानिसहरूको भाग्यमा आउँछ जो वर्णित कुराहरूको प्रयोजन गर्दछन् ।

[3]अहले किताब मध्येबाट जो नबी सल्लल्लाहु अलैहि वसल्लममा विश्वास गर्नेछैन, त्यो नरकमा जानेछ । जस्तो कि बुख़ारी तथा मुस्लिममा छ । (इब्ने कसीर)

وَلَا هُمْ يُنْصَرُوْنَ ﴿١٢٣﴾

स्वीकार गरिनेछ न उसलाई कुनै सिफारिश लाभ पुऱ्याउन सक्नेछ, न उसको सहायता गरिनेछ ।

وَاِذِ ابْتَلٰٓى اِبْرٰهٖمَ رَبُّهٗ بِكَلِمٰتٍ فَاَتَمَّهُنَّ ؕ قَالَ اِنِّىْ جَاعِلُكَ لِلنَّاسِ اِمَامًا ؕ قَالَ وَمِنْ ذُرِّيَّتِىْ ؕ قَالَ لَا يَنَالُ عَهْدِى الظّٰلِمِيْنَ ﴿١٢٤﴾

(१२४) तथा (स्मरण) जब इब्राहीम (अलैहिस्सलाम) सित उनको प्रभुले कैयौं कुराहरूमा परीक्षा लिए[1] तथा उनले सबैलाई पूरा गरी देखाए, त (अल्लाह) ले आदेश गऱ्यो कि म तिमीलाई मानिसहरूको नायक बनाउनेछु । उनले सोधे–तथा मेरो सन्तानलाई ?[2] उत्तर दियो कि मेरो बाचामा अत्याचारीहरूसित होइन ।

[1]शव्दसित तात्पर्य धार्मिक आदेश, हज्‌का नियम, पुत्रको बलि, हिज़रत, नमरुदको अग्नि, आदि ती सबै परीक्षाहरू हुन्, जसबाट आदरणीय इब्राहीम अलैहिस्सलाम गुज्रनु पऱ्यो, तथा उनी हरेक परीक्षामा सफल रहे जसको परिणामस्वरुप मनुष्यहरूका मुखिया पदबाट सम्मानित गरिए । अत: मुसलमान मात्र होइन, यहूदी, इसाई, यहाँसम्मकि अरबका मूर्तिपूजकहरू, सबैमा उनको व्यक्तित्वको सम्मान छ तथा उनलाई अगुवा मानिन्छ तथा सम्भिन्छ ।

[2]अल्लाह तआलाले आदरणीय इब्राहीम अलैहिस्सलामको त्यस इच्छालाई पूर्ण गऱ्यो, जसको वर्णन क़ुर्आन मजीदमै छ ।

﴿وَجَعَلْنَا فِي ذُرِّيَّتِهِ النُّبُوَّةَ وَالْكِتَابَ﴾ (العنكبوت : ٢٧)

"हामीले नबूअत तथा किताब उसको सन्तानलाई प्रदान गऱ्यौं ।" (सूर: अल-अनकबूत-२७)

अत: प्रत्येक नबी जसलाई अल्लाहले पठायो तथा प्रत्येक किताब जुनकि आदरणीय इब्राहीम अलैहिस्सलामको पश्चात अवतरित भयो, इब्राहीमको सन्तानमा नै यो श्रृङ्खला रहयो । (इब्ने कसीर) त्यसको साथ-साथै यो पनि भन्यो कि "मेरा वचन अत्याचारीहरूसित होइन ।" यस कुराको स्पष्टीकरण गरिदियो कि इब्राहीमलाई त्यति उच्च सम्मान तथा अल्लाहद्वारा समर्पित पदको पश्चात इब्राहीमकै सन्तानमा जो उद्दण्ड तथा अत्याचारी एवं मूर्तिपूजक हुनेछन्, उनलाई सिफारिश तथा सहायता गर्नेवाला कोही हुनेछैन । अल्लाह तआलाले यहाँ पैग़म्बरको सन्तानको महिमा महान भन्नेवालाको जरा काटिदिएको छ । यही ईमान तथा सत्कर्म छैन भने महात्माको सन्तान हुनु तथा महान व्यक्तिको

وَإِذْ جَعَلْنَا الْبَيْتَ مَثَابَةً لِّلنَّاسِ وَأَمْنًا ط وَاتَّخِذُوا مِن مَّقَامِ إِبْرَاهِيمَ مُصَلًّى ط وَعَهِدْنَا إِلَىٰ إِبْرَاهِيمَ وَإِسْمَاعِيلَ أَن طَهِّرَا بَيْتِيَ لِلطَّائِفِينَ وَالْعَاكِفِينَ وَالرُّكَّعِ السُّجُودِ ﴿١٢٥﴾

(१२५) हामीले बैतुल्लाह (काअ्बा) लाई मनुष्यहरूका लागि पुण्य तथा शान्तिको स्थान बनायौं,[1] तिमी "मक़ामे इब्राहीम"( इब्राहीमको स्थान–मस्जिदे हराममा एउटा निर्धारित स्थानको नाम हो, जुनकि काअबाको द्वारको सामुन्ने अलिकति बायाँतिर छ।) लाई "मुसल्ला (नमाज़ पढ्ने स्थान) निर्धारित गरिहाल,[2] तथा हामीले इब्राहीम र इस्माईल (अलैहिमुस्सलाम) सित वचन लियौं कि मेरो घरको परिक्रमा र एतकाफ

---

सन्तान हुने कुरालाई अल्लाहको दरबारमा के महत्व होला र ? नबी सल्लल्लाहु अलैहि वसल्लमको भनाई छ :

(مَنْ بَطَّأَ بِهِ عَمَلُهُ لَمْ يُسْرِعْ بِهِ نَسَبُهُ)

"जसलाई उसको कर्मले पछाडी छोड्यो, त्यसलाई त्यसका वंश अगाडी बढाउन सक्ने छैन ।" (सहीह मुस्लिम)

[1]आदरणीय इब्राहीम अलैहिस्सलामको सम्बन्धबाट, जो यसका प्रथम निर्माता हुन्, बैतुल्लाहका दुई विशेषताहरू अल्लाह तआलाले यहाँ वर्णन गऱ्यो । प्रथम ﴿مَثَابَةً لِّلنَّاسِ﴾मानिसहरूका लागि पुण्यको स्थान), दोस्रो अर्थ हो बारम्बार फर्केर आउने स्थान जसले एक पटक बैतुल्लाहको दर्शनको सौभाग्य पाइहाल्यो, त्यो फेरि बारम्बार आउनलाई व्याकुल रहन्छ । यो कस्तो कामना हो, जसको तृप्ति हुँदैन अपितु दिन-प्रतिदिन व्याकुलतामा बृद्धि नै हुँदैजान्छ । दोस्रो विशेषता 'शान्तिस्थली' अर्थात् यहाँ कुनै शत्रुको भय रहँदैन । अतः अज्ञानकालमा पनि मानिसहरू कुनै शत्रुसित "हरम"को सीमामा प्राणघातक बदला लिदैनथे । इस्लामले यसको यस सम्मानलाई शेष राख्यो तथा यसलाई विस्तृत गरी यसको पालनामा जोड दियो ।

[2]**'इब्राहीमको स्थान'** सित तात्पर्य त्यो पत्थर हो, इब्राहीम जसमा उभिएर आदरणीय अलैहिस्सलाम काअ्बाको निर्माण गर्दथे । यस पत्थरमा आदरणीय अलैहिस्सलामका पद-चिन्ह छन् । अहिले यस पत्थरलाई एउटा शीशामा सुरक्षित राखिएको छ, जसलाई प्रत्येक हाजी तथा उमरा गर्ने व्यक्ति बैतुल्लाह दर्शनको समय हेर्न सक्दछ । यस स्थानमा परिक्रमा पूर्ण गरे पश्चात दुई रकात नमाज़ पढ्नु सुन्नत छ ।

गर्ने तथा रुकूअ गर्ने एवं सजदः गर्नेहरूका लागि पवित्र एवं शुद्ध राख ।

(१२६) तथा जब इब्राहीमले भने, हे प्रभु ! तिमी यस स्थानलाई शान्तिमय नगर बनाउ तथा यहाँका निवासीहरूलाई जो अल्लाह तथा क़्यामतका दिनमा विश्वास गर्नेहरू छन्, फलहरूको बृद्धि प्रदान गर ।[1] अल्लाह (तआ़ला) ले भन्यो कि म काफ़िरहरूलाई पनि अलिकति लाभ दिनेछु अनि उनीहरूलाई आगोको यातनातिर विवश गरिदिनेछु । त्यो साह्रै नराम्रो स्थान हो ।

وَإِذْ قَالَ إِبْرَٰهِـۧمُ رَبِّ ٱجْعَلْ هَـٰذَا بَلَدًا ءَامِنًا وَٱرْزُقْ أَهْلَهُۥ مِنَ ٱلثَّمَرَٰتِ مَنْ ءَامَنَ مِنْهُم بِٱللَّهِ وَٱلْيَوْمِ ٱلْـَٔاخِرِ ۖ قَالَ وَمَن كَفَرَ فَأُمَتِّعُهُۥ قَلِيلًا ثُمَّ أَضْطَرُّهُۥٓ إِلَىٰ عَذَابِ ٱلنَّارِ ۖ وَبِئْسَ ٱلْمَصِيرُ ﴿١٢٦﴾

(१२७) र (स्मरण गर) इब्राहीम (अलैहिस्सलाम) तथा इस्माईल (अलैहिस्सलाम) काअ़बाको जग (तथा पर्खालहरू) उठाउँदै जान्थे तथा भन्दै जान्थे कि हे हाम्रा पालनकर्ता ! तिमी हामीबाट यस कार्यलाई स्वीकार गर, तिमी नै सर्वश्रोता तथा सर्वज्ञाता हौ ।

وَإِذْ يَرْفَعُ إِبْرَٰهِـۧمُ ٱلْقَوَاعِدَ مِنَ ٱلْبَيْتِ وَإِسْمَـٰعِيلُ رَبَّنَا تَقَبَّلْ مِنَّآ ۖ إِنَّكَ أَنتَ ٱلسَّمِيعُ ٱلْعَلِيمُ ﴿١٢٧﴾

(१२८) हे हाम्रो पोषक ! हामीलाई आफ्ना आज्ञाकारी बनाउ तथा हाम्रा सन्तान मध्येबाट एक समूहलाई आफ्नो आज्ञाकारी बनाउ तथा हामीलाई आफ्ना उपासनाहरू सिकाउ एवं हाम्रो याचना स्वीकार गर । तिमी क्षमावान्, दयानिधि हौं ।

رَبَّنَا وَٱجْعَلْنَا مُسْلِمَيْنِ لَكَ وَمِن ذُرِّيَّتِنَآ أُمَّةً مُّسْلِمَةً لَّكَ وَأَرِنَا مَنَاسِكَنَا وَتُبْ عَلَيْنَآ ۖ إِنَّكَ أَنتَ ٱلتَّوَّابُ ٱلرَّحِيمُ ﴿١٢٨﴾

[1] अल्लाह तआ़लाले आदरणीय इब्राहीमका यी प्रार्थनाहरू स्वीकार गर्‍यो । यो नगर शान्तिको नगरी पनि हो, तथा अकृष्ट भूमि भएपनि संसारका सबै फल तथा हरेक प्रकारका अनाजको अधिकतालाई देखेर मनुष्य आश्चर्यचकित हुन्छ ।

رَبَّنَا وَابْعَثْ فِيهِمْ رَسُولًا مِّنْهُمْ يَتْلُوا عَلَيْهِمْ آيَاتِكَ وَيُعَلِّمُهُمُ الْكِتَابَ وَالْحِكْمَةَ وَيُزَكِّيهِمْ ۚ إِنَّكَ أَنتَ الْعَزِيزُ الْحَكِيمُ ﴿١٢٩﴾

(१२९) हे हाम्रो पोषक ! उनीहरूमा, उनीहरूबाट नै एउटा रसूल (ईशदूत) पठाउ,[1] जो उनीहरूको पासमा तिम्रा आयतहरू पढुन् तथा उनीहरूलाई धर्मशास्त्र एवं विज्ञान सिकाऊन्[2] तथा उनीहरूलाई शुद्ध गरून् ।[3] नि:सन्देह तिमी नै प्रभावशाली एवं तत्वज्ञानी हौ ।

وَمَن يَرْغَبُ عَن مِّلَّةِ إِبْرَاهِيمَ إِلَّا مَن سَفِهَ نَفْسَهُ ۚ وَلَقَدِ اصْطَفَيْنَاهُ فِي الدُّنْيَا ۖ وَإِنَّهُ فِي الْآخِرَةِ لَمِنَ الصَّالِحِينَ ﴿١٣٠﴾

(१३०) र इब्राहीमको धर्मबाट त्यही विमुख हुनेछ, जो स्वयं मूर्ख हुन्छ, हामीले त त्यसलाई संसारमा पनि रोजेका थियौं तथा परलोकमा पनि त्यो सत्कर्मीहरूमध्ये छ ।

[1]यो आदरणीय इब्राहीमं तथा इस्माईलको अन्तिम प्रार्थना हो । यो पनि अल्लाह तआला‌ले स्वीकार गऱ्यो तथा आदरणीय इस्माईल अलैहिस्सलामको सन्तान मध्येबाट परम आदरणीय मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई रसूल बनायो । यसैले नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

( أنَا دَعْوَةُ أَبِي إِبْرَاهِيم ، وَبِشَارَةُ عِيسَى وَرُؤْيَا أُمي الَّتِي رَأَت )

"म आफ्नो पिता आदरणीय इब्राहीम अलैहिस्सलामको प्रार्थना, आदरणीय ईसाको शुभ-सूचना तथा आफ्नी माताको स्वप्न हूँ ।" (मुसनद अहमद ससंदर्भ इब्ने कसीर) अरबको समाजमा परम पितामहलाई पनि पिता सरह नै सम्मान स्वरुप सम्बोधित गर्दछन् ।

[2]किताबसित तात्पर्य कुरआन करीम तथा विज्ञानसित तात्पर्य हदीस छ । आयतहरू पढिसके पश्चात किताब तथा सुन्नतको शिक्षाको वर्णनबाट ज्ञात हुन्छ कि कुरआन मजीदलाई मात्र पढ्नु पनि प्रिय तथा पुण्यको कारण हो । यदि त्यसको भावार्थ मात्र बुझिएछ भने सुब्हानल्लाह, सुनमा सुगन्ध हुनेछ । तर यदि कुरआनको अनुवाद तथा भावार्थ बुझिन्न भने पनि त्यसको पठनमा आलस्य उचित छैन, कुरआनको पठन स्वयं एउटा अलग्गै पुण्यको कार्य हो ।

[3]कुरआनको पठन एवं किताबको शिक्षा एवं बुद्धिमतापूर्ण शिक्षाको पश्चात उहाँ सल्लल्लाहु अलैहि वसल्लमको दूत कर्मको यो चौथो उद्देश्य हो कि उनीहरूलाई बहुदेववाद तथा अन्धविश्वासको फोहोरबाट तथा चरित्र एवं व्यवहारका दुर्गुणहरूबाट पवित्र गरुन ।

[4]अरबी भाषामा رغب को सम्बन्ध عن सित छ भने, त्यसको अर्थ अनिच्छा हुन्छ । यहाँ अल्लाह तआला, आदरणीय इब्राहीम अलैहिस्सलामका ती मान-सम्मानको वर्णन गरिराखेको छ, जुनकि अल्लाह तआलाले उनलाई संसार तथा परलोकमा गरेको छ तथा यो पनि स्पष्ट गरिदियो कि इब्राहीमको समुदायबाट मुख फर्काउनु तथा

إِذْ قَالَ لَهُۥ رَبُّهُۥٓ أَسْلِمْ ۖ قَالَ أَسْلَمْتُ لِرَبِّ ٱلْعَٰلَمِينَ ﴿١٣١﴾

(१३१) जहिले (पनि) उसको पोषकले भन्यो कि आत्मसमर्पण गर, त्यतिखेर भन्यो कि मैले विश्वको स्वामीको लागि आत्मसमर्पण गरें।[1]

وَوَصَّىٰ بِهَآ إِبْرَٰهِۦمُ بَنِيهِ وَيَعْقُوبُ يَٰبَنِىَّ إِنَّ ٱللَّهَ ٱصْطَفَىٰ لَكُمُ ٱلدِّينَ فَلَا تَمُوتُنَّ إِلَّا وَأَنتُم مُّسْلِمُونَ ﴿١٣٢﴾

(१३२) यसैको वसीयत (निर्देशन) इब्राहीम तथा याकूबले आफ्ना सन्तानलाई गरे, कि हाम्रा बच्चाहरू ! अल्लाह (तआला) ले तिम्रो लागि यस धर्मलाई निर्धारित गरिदिएको छ, सावधान ! तिमी मुसलमान नै भएको अवस्थामा मर्नू ।[2]

أَمْ كُنتُمْ شُهَدَآءَ إِذْ حَضَرَ يَعْقُوبَ ٱلْمَوْتُ إِذْ قَالَ لِبَنِيهِ

(१३३) के तिमी (आदरणीय) याकूबको मृत्युको समय उपस्थित थियौ ?[3] जब उनले आफ्ना

---

स्पष्ट गरिदियो कि इब्राहीमको समुदयबाट मुख फर्काउनु तथा अनिच्छा व्यक्त गर्नु मुर्खहरूको कार्य हो, कुनै बुद्धिमानबाट यो कल्पना पनि गर्न सकिंदैन ।

[1]यो सम्मान तथा महत्व यसकारण प्राप्त भयो कि उनले आज्ञापालन तथा अनुकरणको अद्वितीय नमूना प्रस्तुत गरे ।

[2]आदरणीय इब्राहीम अलैहिस्सलाम तथा आदरणीय याकूब अलैहिस्सलामले ( الدين ) (सत्य धर्म) को वसीयत (निर्देशन) आफ्ना सन्तानलाई गरे जुन यहूदी धर्म होइन इस्लाम धर्म नै हो । जस्तो कि यहाँपनि यसको स्पष्टीकरण विद्यमान छ तथा कुरआन करीममा विभिन्न स्थानहरूमा पनि यसको विस्तृत वर्णन छ ।

[3]यहूदीहरूलाई चेतावनी तथा सावधान गरिंदैछ कि तिमी जुन यो दाबी गर्दछौ कि इब्राहीम तथा याकूबले आफ्ना सन्तानलाई यहूदी धर्ममा नै दृढ रहने कुराको वसीयत गर्नुभएको थियो, त के तिमी वसीयतको समयमा उपस्थित थियौ ? यदि उनीहरू भन्छन् कि उनीहरू उपस्थित थिए, त उनीहरू झूठा र पाखण्डी भए तथा यदि भन्छन् कि उपस्थित थिएनन् त उनीहरूको वर्णित दाबी असत्य सिद्ध भयो किनभने उनले जुन वसीयत गरेका थिए त्यो इस्लामको थियो न कि यहूदी धर्मको, न इसाई धर्मको, न मूर्तिपूजाको । सबै नबीहरूको धर्म इस्लाम धर्म थियो, यद्यपि नियमहरू तथा विषयहरूमा अलि अन्तर रहेको छ । यसलाई नबी सल्लल्लाहु अलैहि वसल्लमले यी शब्दहरूमा वर्णन गर्नुभएको छ ।

( الأَنبِيَاءُ أَوْلَادُ عَلَّاتٍ، أُمَّهَاتُهُمْ شَتَّى، وَدِينُهُمْ وَاحِدٌ )

"नबीहरूको समूह" 'अल्लात' सन्तानको जस्तै छ, यिनका माताहरू भिन्न (तथा पिता एक) छन् तथा उनको धर्म एउटै नै छ । (सहीह बुखारी किताबुल अम्बिया)

مَا تَعْبُدُوْنَ مِنْۢ بَعْدِيْ ؕ قَالُوْا نَعْبُدُ اِلٰهَكَ وَاِلٰهَ اٰبَآئِكَ اِبْرٰهٖمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ اِلٰهًا وَّاحِدًا ۚۖ وَّنَحْنُ لَهٗ مُسْلِمُوْنَ ﴿١٣٣﴾

सन्तानसित भने कि मेरो मृत्यु पश्चात कसको इबादत (उपासना) गर्नेछौ ? तब सबैले उत्तर दिएका थिए कि तपाईंका प्रभुको तथा तपाईंका पूर्वज इब्राहीम तथा इस्माईल तथा इसहाकका ईष्टदेवको, जो एउटै छ । तथा हामी उसैका आज्ञापालक रहनेछौं ।

تِلْكَ اُمَّةٌ قَدْ خَلَتْ ۚ لَهَا مَا كَسَبَتْ وَلَكُمْ مَّا كَسَبْتُمْ ۚ وَلَا تُسْـَٔلُوْنَ عَمَّا كَانُوْا يَعْمَلُوْنَ ﴿١٣٤﴾

(१३४) यो समुदाय त गुज्रिसक्यो, (अवसान भइसक्यो जे उनीहरूले गरे त्यो उनीहरूको लागि छ तथा जुन तिमीले गर्नेछौ, त्यो तिम्रो लागि हुनेछ । उनीहरूको कर्मको विषयमा तिमीसित सोधिने छैन ।[1]

وَقَالُوْا كُوْنُوْا هُوْدًا اَوْ نَصٰرٰى تَهْتَدُوْا ؕ قُلْ بَلْ مِلَّةَ اِبْرٰهٖمَ حَنِيْفًا ؕ وَمَا كَانَ مِنَ الْمُشْرِكِيْنَ ﴿١٣٥﴾

(१३५) र उनीहरू भन्छन् कि यहूदी तथा इसाई बन अनि मार्ग-दर्शन पाउनेछौ, तिमी भन कि सही मार्गमा त इब्राहीम (अलैहिस्सलाम) का अनुयायी छन्, तथा इब्राहीम (अलैहिस्सलाम) मात्र अल्लाहका आज्ञाकारी थिए, उनी मूर्तिपूजक थिएनन् ।[2]

[1]यो पनि यहूदीहरूलाई भनिदैछ कि तिम्रा पूर्वजहरूमा जो नबी तथा सत्कर्मी भैसकेका छन्, उनीसित सम्वन्धको कुनै लाभ छैन । उनीहरूले जे-जति पनि गरे, त्यसको प्रतिफल उनीहरूलाई प्राप्त हुनेछ, तिमीलाई होइन, तिमीलाई त त्यही अनुसार प्राप्त हुनेछ, जस्तो तिमी कर्म गर्नेछौ । यसबाट ज्ञात भयो कि पूर्वजहरूको पुण्यात्मक कार्यहरूमा भरोसा तथा आश्रित हुनु गलत हो । वास्तविक कुरो ईमान तथा पूण्य कार्य नै हुन् । यो पूर्वका पण्यकर्ताहरूको पनि धर्म थियो तथा केयामतसम्म (अन्तिम दिन) आउने मानिसहरूको मोक्षको एकमात्र साधन हो ।

[2]यहूदी, मुसलमानहरूलाई यहूदी धर्मको तथा इसाई धर्मको आमन्त्रणा दिन्थे तथा भन्थे कि मार्गदर्शनको प्रकाश यसैमा छ । अल्लाह तआलाले भन्यो कि उनीसित भन कि प्रकाश इब्राहीमको धर्मको अनुकरणमा छ, जो हनीफ थियो (अर्थात् एक मात्र अल्लाहकै अनुयायी तथा त्यसको उपासना गर्नेवाला) त्यो मूर्तिपूजक थिएन, जबकि यहूदी धर्म तथा इसाई धर्म दुवैमा मूर्तिपूजाको समावेश छ । अब दूर्भाग्यले मुसलमानहरूमा पनि मूर्तिपूजनको प्रदर्शन सामान्य रूपले भइराखेका छन्, इस्लामको शिक्षा (بحمد الله) कुरआन तथा हदीसमा सुरक्षित छन्, जसमा एकेश्वरवादको आधारशिला एवं शिक्षा धमिलो नभई अति स्पष्टरुपमा छ,

قُوْلُوْٓا اٰمَنَّا بِاللّٰهِ وَمَآ اُنْزِلَ اِلَيْنَا وَمَآ اُنْزِلَ اِلٰٓى اِبْرٰهٖمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ وَيَعْقُوْبَ وَالْاَسْبَاطِ وَمَآ اُوْتِيَ مُوْسٰى وَعِيْسٰى وَمَآ اُوْتِيَ النَّبِيُّوْنَ مِنْ رَّبِّهِمْ ۚ لَا نُفَرِّقُ بَيْنَ اَحَدٍ مِّنْهُمْ ۖ وَنَحْنُ لَهٗ مُسْلِمُوْنَ ﴿١٣٦﴾

(१३६) (हे मुसलमानहरू !) तिमी सबै भन हामी अल्लाहमा ईमान ल्यायौं तथा त्यसमा पनि जे हामीतिर उतारियो तथा जे इब्राहीम, इस्माईल, इसहाक, तथा याकूब एवं उनका सन्तानमाथि उतारियो तथा जे-जति अल्लाहको तर्फबाट मूसा, ईसा तथा अन्य नबीहरूलाई दिइयो । हामी उनीहरूमध्ये कसैमा भेदभाव गर्दैनौं, हामी अल्लाहका आज्ञाकारी हौं ।[1]

فَاِنْ اٰمَنُوْا بِمِثْلِ مَآ اٰمَنْتُمْ بِهٖ فَقَدِ اهْتَدَوْا ۚ وَاِنْ تَوَلَّوْا فَاِنَّمَا هُمْ فِيْ شِقَاقٍ ۚ فَسَيَكْفِيْكَهُمُ اللّٰهُ ۚ وَهُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿١٣٧﴾

(१३७) यदि उनीहरू तिमीजस्तै ईमान ल्याए भने मार्गदर्शन पाउनेछन्, तथा यदि विमुख भए भने विरोधमा छन्, अल्लाह (तआ़ला) उनी विरूद्ध निकट भविष्यमा तिम्रो सहायता गर्नेछ ।[2] त्यो उचितरुपले सुन्नेवाला तथा जान्नेवाला छ ।

---

जसबाट यहूदी, इसाई तथा मूर्तिपूजक धर्महरू (देवताहरूमा आस्था राख्नेवालाहरू) बाट इस्लामको भिन्नता स्पष्ट छ, परन्तु मुसलमानहरूको एक ठूलो संख्याको कर्म तथा विश्वासमा जुन मूर्तिपूजन प्रक्रियाका कल्पनाहरूले प्रवेश गरिहालेका छन्, त्यसले इस्लामको छविलाई संसारको दृष्टिबाट धमिलो तथा ओझेलमा पारिदिएको छ, किनभने अन्य धर्मका अनुयायीहरूको पहुँच सोझै कुरआन तथा हदीससम्म त हुनसक्दैन । उनीहरू मुसलमानका कर्महरूलाई देखेर नै अनुमान गर्नेछन् कि इस्लाममा तथा अन्य मूर्तिपूजाबाट प्रदूषित धर्मको बीच कुनै अन्तर नै प्रकट भइराखेको छैन । आउँदो आयतमा ईमानको सिद्धान्त वर्णन गरिदैछ ।

[1]अर्थात् ईमान यो हो कि सबै नबीहरूलाई अल्लाह तआ़लाको तर्फबाट जे-जति प्राप्त भयो अथवा उनीमाथि उतारियो, सबैमा विश्वास गरियोस्, कुनै पनि किताब तथा रसूललाई अस्वीकार नगरियोस् । कुनै एक किताब अथवा नबीलाई मान्नु, कसैलाई नमान्नु, यो नबीहरूमा अन्तर व्यक्त गर्दछ जसलाई इस्लामले उचित भनेको छैन । तर अब कर्म मात्र कुरआन करीमका नियमहरू तथा आदेशानुसार हुनेछन्, पूर्व किताबहरूमा लेखिए अनुसार होइन, किनभने पहिला त उनी आफ्नो मूलरुपमा छैनन्, परिवर्तित छन्, दोस्रो कुरआनले ती सबैका आदेशहरूलाई निरस्त गरिदिएको छ ।

[2]सहाबा किराम (رضی اللہ عنہم) पनि यसै वर्णित नियम अनुसार ईमान ल्याएका थिए, यसैले सहाबाको उदाहरण दिंदै भनिदैछ कि, यदि उनीहरू यसैप्रकार ईमान ल्याउँछन्,

صِبْغَةَ اللّٰهِ ۚ وَمَنْ أَحْسَنُ مِنَ اللّٰهِ صِبْغَةً ۖ وَنَحْنُ لَهُ عَابِدُونَ ﴿١٣٨﴾

(१३८) अल्लाहको रङ्ग ग्रहण गर तथा अल्लाह (तआ़ला) भन्दा राम्रो रङ्ग कसको होला ?[1] हामी त त्यसैको इबादत (उपासना) गर्नेहरू हौं ।

قُلْ أَتُحَاجُّونَنَا فِي اللّٰهِ وَهُوَ رَبُّنَا وَرَبُّكُمْ وَلَنَا أَعْمَالُنَا وَلَكُمْ أَعْمَالُكُمْ وَنَحْنُ لَهُ مُخْلِصُونَ ﴿١٣٩﴾

(१३९) (तपाईं) भनिदिनुस् कि के तिमी हामीसित अल्लाहको विषयमा झगडा गर्छौ, जो हाम्रो तथा तिम्रो प्रभु हो, हाम्रा लागि हाम्रा कर्म छन्, तिम्रा लागि तिम्रा कर्म,[2] हामी त शुद्धरुपले उसैका लागि हौं ।

जसप्रकार हे सहावा (رضی الله عنهم) तिमीले ईमान ल्याएका छौ भने अवश्य उनीहरूलाई मार्गदर्शन प्राप्त भइहाल्नेछ । यदि उनीहरू द्वेष तथा मतभेदका कारण मुख फर्काउँछन् भने आत्तिनुपर्ने आवश्यकता छैन, तिनीहरूका षड्यन्त्र तपाईंको केही बिगार्न सक्ने छैनन् किनभने अल्लाह तआ़ला तपाईंको संरक्षण गर्नेवाला छ । अतः केही वर्ष पश्चात नै त्यो वचन पूरा भयो तथा वनू कैनुकाअ एवं वनू नजीरलाई देश निष्काशन गरिदिइयो तथा वनू कुरैजा़लाई मारियो । ऐतिहासिक कथनमा छ कि आदरणीय उस्मान رضی الله عنه को शहादतको समय कुरआन उनको काखमा थियो तथा यस आयतका वाक्य(فسيكفيكهم الله) माथि उनको शरीरको रगतका थोपाहरू खसे । वरु रगतको धार पनि । यो कुरआन आज पनि टर्कीको पुरातत्व विभागमा सुरक्षित राखिएको छ ।

[1]इसाईहरूले एउटा पहेलो रङ्गको पानी निर्धारित गरेका छन्, जुनकि प्रत्येक इसाई बालकलाई तथा प्रत्येक त्यस व्यक्तिलाई पनि दिइन्छ, जसको उद्देश्य इसाई धर्म स्वीकार गर्नुपर्ने हुन्छ । यस रीतिको नाम उनीकहाँ "वैप्टिज़्म" छ । यो उनीकहाँ अति आवश्यक छ, यसविना उनीहरू कसैको पवित्र हुने कुराको कल्पना गर्दैनन् । अल्लाह तआ़लाले उनको खण्डन गरेको छ तथा भनेको छ कि वास्तविक रङ्ग त अल्लाहको रङ्ग हो । त्यसभन्दा श्रेष्ठ कुनै रङ्ग छैन । अल्लाहको रङ्गको तात्पर्य त्यो प्राकृतिक धर्म हो अर्थात इस्लाम धर्म हो, जसतर्फ प्रत्येक नवीले आ-आफ्नो कालमा आ-आफ्ना समुदायलाई आमन्त्रण गरे । अर्थात् 'एकेश्वरवाद' को आमन्त्रण ।

[2]के तिमी हामीसित यसकारण झगडा गर्दछौ कि हामी एक अल्लाहको पूजा गर्दछौं, उसैको लागि शुद्धरुपले पक्षधरको भावना राख्दछौं तथा उसैद्वारा वैधताको पालन तथा निषेधवाट वचाव गर्दछौं, यद्यपि त्यो हाम्रै प्रभु मात्र होइन तिम्रो पनि हो तथा तिमीले पनि उसँग यस्तै व्यवहार गर्नुपर्दछ जस्तो हामी गर्दछौं । यदि तिमी यस्तो गर्दैनौं भने तिम्रो कर्म तिमिसित, हाम्रो कर्म हामीसित । हामी त उसैको लागि शुद्धरुपले कार्य गर्दछौं ।

أَمْ تَقُولُونَ إِنَّ إِبْرَاهِيمَ وَإِسْمَاعِيلَ وَإِسْحَاقَ وَيَعْقُوبَ وَالْأَسْبَاطَ كَانُوا هُودًا أَوْ نَصَارَىٰ ۗ قُلْ أَأَنْتُمْ أَعْلَمُ أَمِ اللَّهُ ۗ وَمَنْ أَظْلَمُ مِمَّنْ كَتَمَ شَهَادَةً عِنْدَهُ مِنَ اللَّهِ ۗ وَمَا اللَّهُ بِغَافِلٍ عَمَّا تَعْمَلُونَ ﴿١٤٠﴾

(१४०) के तिमी भन्छौ कि इब्राहीम, इस्माईल, इसहाक तथा याकूब एवं उनका सन्तान यहूदी अथवा इसाई थिए ? भनिदेउ के तिमी धेरै जान्दछौ अथवा अल्लाह (तआला) ?[१] अल्लाह छेउ प्रमाण लुकाउनेवालाहरूभन्दा धेरै अत्याचारी अन्य को छ ? तथा अल्लाह (तआला) तिम्रा कर्महरूबाट अचेत छैन ।[२]

تِلْكَ أُمَّةٌ قَدْ خَلَتْ ۖ لَهَا مَا كَسَبَتْ وَلَكُمْ مَا كَسَبْتُمْ ۖ وَلَا تُسْأَلُونَ عَمَّا كَانُوا يَعْمَلُونَ ﴿١٤١﴾

(१४१) यो समुदाय हो जुन गुज्रिसक्यो, उनीहरूले गरे, उनीहरूका लागि छ तथा जे तिमीले गर्‍यौ तिम्रो लागि, तिमीसित उनका कर्महरूबारे प्रश्न गरिने छैन ।[३]

---

[१]तिमी भन्छौ यी नबीहरूको समूह तथा त्यसका सन्तानहरू यहूदी अथवा इसाई थिए, जबकि अल्लाह तआला त्यसको खण्डन गरिराखेको छ । अब तिमी नै भन कि धेरै ज्ञान अल्लाहलाई छ कि तिमीलाई ?

[२]तिमीलाई ज्ञात छ कि यी नबी, यहूदी तथा इसाई थिएनन्, यसैप्रकार तिम्रा किताबहरूमा परम आदरणीय नबी सल्लल्लाहु अलैहि वसल्लमका निशानीहरू छन्, तर ती प्रमाणहरूलाई मानिसहरूबाट लुकाएर एउटा ठूलो अत्याचार गरिराखेका छौ, जुन अल्लाह तआलासित लुकेको छैन ।

[३]यस आयतमा पुनः लाभ तथा कर्मको विशेषताको वर्णन गरी पूर्वजहरू तथा महात्माहरूसित सम्बन्ध अथवा उनीमाथि भरोसालाई निरर्थक भनिएको छ, किनभने (مَنْ بَطَّأَ بِهِ عَمَلُهُ لَمْ يُسْرِعْ بِهِ نَسَبُهُ)

"जसलाई उसको कर्मले पछाडी छाडिदियो, उसको वंशले त्यसलाई अगाडी बढाउने छैन ।" (सहीह मुस्लिम)

अर्थ यो हो कि पूर्वजहरूको पुण्यबाट तिमीलाई कुनै लाभ तथा उनीहरूका पापमा तिमीसित कुनै सोधपूछ हुनेछैन, अपितु उनीहरूका कर्मको विषयमा तिमीसित अथवा तिम्रा कर्महरूको विषयमा उनीसित सोधिने छैन ।

﴿ وَلَا تَزِرُ وَازِرَةٌ وِزْرَ أُخْرَىٰ ﴾ [فاطر: ١٨]

"कोही कसैको बोझ उठाउने छैन ।" (सूर: फातिर-१८)

﴿ وَأَنْ لَيْسَ لِلْإِنْسَانِ إِلَّا مَا سَعَىٰ ﴾ [النجم: ٣٩]

मनुष्यको लागि त्यो नै सबैथोक हो जसको लागि उसले प्रयत्न गर्‍यो । (सूर: अल-नजम-३९)

سَيَقُولُ السُّفَهَاءُ مِنَ النَّاسِ مَا وَلَّاهُمْ عَنْ قِبْلَتِهِمُ الَّتِي كَانُوا عَلَيْهَا ۚ قُل لِّلَّهِ الْمَشْرِقُ وَالْمَغْرِبُ ۚ يَهْدِي مَن يَشَاءُ إِلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿١٤٢﴾

(१४२) छिटै नै मूर्खहरू भन्नेछन् कि क़िब्ला (जुन दिशातर्फ मुख फर्काइ नमाज़ पढिन्छ) मा यिनी (मुसलमान) थिए त्यसबाट यिनलाई कुन विषयले विमुख गरिदियो ? (तपाई) भनिदिनुस् कि पूर्व तथा पश्चिमको मालिक अल्लाह (तआ़ला) हो, त्यो जसलाई चाहन्छ सोझो मार्ग दर्शाउँछ ।[1]

وَكَذَٰلِكَ جَعَلْنَاكُمْ أُمَّةً وَسَطًا لِّتَكُونُوا شُهَدَاءَ عَلَى النَّاسِ

(१४३) तथा हामीले यसैप्रकार तिमीलाई माध्यम (सन्तुलित) समुदाय बनाएका छौं ।[2] ताकि तिमी

[1]जब नवी सल्लल्लाहु अलैहि वसल्लम मक्काबाट हिज्रत गरी मदीना पाल्नुभयो तव १६-१७ महिनासम्म वैतुल मक़्दिसतिर मुख फर्काइ नमाज़ पढ्दै गर्नुभयो । जवकि हार्दिक इच्छा थियो कि ख़ानये का़अबातिर मुख फर्काइ नमाज़ पढियोस् जुनकि आदरणीय इब्राहीमको क़िब्ला थियो । यसको निम्ति उहाँ प्रार्थना पनि गर्नु हुन्थ्यो तथा पटक-पटक उहाँ आकाशतिर दृष्टि गर्नुहुन्थ्या । अन्त्यमा अल्लाह तआ़लाले क़िब्लाको परिवर्तनको आदेश दिनुभयो जसमाथि यहूदी तथा भ्रष्टाचारीहरूले हल्ला मच्चाए । यद्यपि नमाज़ अल्लाहको इवादत हो तथा इवादतमा उपासक (इवादत गर्नेवाला) लाई जुन प्रकारको आदेश हुन्छ, त्यस अनुसार गर्नको लागि त्यो बाध्य हुन्छ, यसकारण जतातिर अल्लाहले मुख फेरि दियो, त्यतैतिर फर्किनु अनिवार्य थियो । यसका अतिरिक्त जुन अल्लाहको इबादत गर्नु छ पूर्व, पश्चिम दिशाहरु उसैका हुन्, यसकारण दिशाहरुको कुनै महत्व छैन । प्रत्येक दिशामा अल्लाहको इबादत हुनसक्छ, यदि त्यस दिशालाई अपनाउन अल्लाहले आदेश दिएको छ । क़िब्ला परिवर्तनको यो आदेश "असर" को नमाज़को समय आयो तथा "असर" को नमाज़ ख़ानये का़अबातिर मुख फर्काइ पढियो ।

[2](وسط) को शब्दार्थ हो, 'मध्य', तर यो महानता तथा श्रेष्ठताको लागि पनि उपयुक्त हुन्छ, यहाँ यसै अर्थमा प्रयोग भएको छ, अर्थात् जुनप्रकार तिमीलाई सर्व श्रेष्ट किवला प्रदान गरिएको छ त्यसै प्रकार तिमीलाई सर्वश्रेष्ठ समुदाय पनि बनाइएको छ । उद्देश्य यो हो कि तिमी मानिसहरूबारे साक्षी बन । जस्तो कि अन्य स्थानमा छ ﴿لِيَكُونَ الرَّسُولُ شَهِيدًا عَلَيْكُمْ وَتَكُونُوا شُهَدَاءَ عَلَى النَّاسِ﴾ [الحج: ٧٨] (सूर: अल-हज्ज, ७८) रसूल तिमीबारे र तिमी मानिसहरूबारे साक्षी होस् । यसको स्पष्टीकरण केही हदीसहरूमा यसप्रकार आएको छ कि जब अल्लाह तआ़ला पैग़म्बरहरू (ईशदूतहरु) सित केयामतका दिन सोध्छ कि तिमीले मेरा सन्देश मानिसहरूसम्म पुऱ्याएका थियौ ? उनी सकारात्मक उत्तर दिनेछन् । अल्लाह तआ़ला सोध्छ कि तिम्रो कोही साक्षी छ ? उनी भन्नेछन् महम्मद सल्लल्लाहु अलैहि वसल्लम तथा उनका अनुयायी । अत: यी अनुयायी साक्षी दिनेछन्

وَيَكُونَ الرَّسُولُ عَلَيْكُمْ شَهِيدًا ۗ وَمَا جَعَلْنَا الْقِبْلَةَ الَّتِي كُنتَ عَلَيْهَا إِلَّا لِنَعْلَمَ مَن يَتَّبِعُ الرَّسُولَ مِمَّن يَنقَلِبُ عَلَىٰ عَقِبَيْهِ ۚ وَإِن كَانَتْ لَكَبِيرَةً إِلَّا عَلَى الَّذِينَ هَدَى اللَّهُ ۗ وَمَا كَانَ اللَّهُ لِيُضِيعَ إِيمَانَكُمْ ۚ إِنَّ اللَّهَ بِالنَّاسِ لَرَءُوفٌ رَّحِيمٌ ﴿١٤٣﴾

मानिसहरूका लागि साक्षी बन तथा रसूल (सल्लल्लाहु अलैहि वसल्लम) तिम्रो निम्ति साक्षी बनुन्, जुन क़िब्लामा तिमी पहिलेदेखि नै थियौ, त्यसलाई हामीले मात्र यसकारण निर्धारण गरेका थियौं कि हामी जान्न सकौं कि रसूलका सच्चा अनुयायी को-को छन् तथा को छ जो फर्कि विमुख हुनजान्छ,[1] यद्यपि यो काम कठिन छ, तर जसलाई अल्लाहले मार्गदर्शन प्रदान गरेको छ (उनीहरूलाई कुनै कठिनाई छैन) अल्लाह (तआ़ला) ले तिम्रो ईमान नष्ट गर्ने छैन,[2] अल्लाह (तआ़ला) मानिसहरूसित प्रेम गर्ने तथा अति कृपालु छ ।

यसकारण यसको अनुवाद 'न्यायकर्ता' पनि गरिएको छ । (इब्ने कसीर) एउटा अर्थ (وسط) को मध्यम पनि गरिएको छ, अर्थात् मध्यम समुदाय– अर्थात् अधिकता अथवा कमी गर्नुबाट शुद्ध । यो इस्लामका शिक्षाहरूको आधारमा छ कि यसमा मध्यमता छ, न अधिकता न कमी ।

[1]यो क़िब्ला परिवर्तनको एउटा कारण भनिएको छ । ईमानवाला, सच्चा व्यक्तिहरु त रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका आँखाका इशाराको प्रतीक्षामा रहने गर्थे, यसकारण उनीहरूका लागि यताबाट उता फर्किनु कुनै कठिन कार्य थिएन बरु एक स्थानमा त नमाज़को स्थितिमा जबकि उनीहरु रुकूअमा थिए यो आदेश आइपुग्यो त उनले रुकूअमा नै आफ्ना मुख ख़ानये काअ़बातिर फर्काइहाले । यो मस्जिदे क़िबलतैन (अर्थात् त्यो मस्जिद जसमा एक नमाज़ दुई क़िब्लातिर मुख फर्काई पढिएको होस्) भनिन्छ । यस्तो घटना मस्जिदे क़ुबामा पनि भयो । لنعلم (कि हामी जानीहालौं) अल्लाहलाई त पहिले नै ज्ञान थियो, यसको अर्थ यो हो कि हामी विश्वासी मानिसहरू मध्येबाट सन्देह गर्नेवालाहरूलाई अलग गरिदेऔं ताकि मनिसहरूका समक्ष दुबै प्रकारका मानिसहरू स्पष्ट भइहालून् । (फ़तहुल क़दीर)

[2]केही सहाबाको बुद्धिमा यो शंका उत्पन्न भयो कि जुन सहाबीहरूको बैतुल मक़्दिसतिर मुख फर्काइ नमाज़ पढेको समयमा मृत्यु भयो अथवा हामी जतिबेलासम्म त्यतातिर मुख फर्काइ नमाज़ पढ्दै आइराखेका छौं, यो व्यर्थ भयो अथवा शायद त्यसको पुण्य प्राप्त हुनेछैन । अल्लाह तआ़लाको आदेश भयो कि यी नमाज़हरू नष्ट हुने छैनन्, तिमीलाई पुण्य प्राप्त हुनेछ । यहाँ नमाज़लाई ईमानसित वर्णन गरेर यो पनि स्पष्ट गरिहालियो कि नमाज़ बिना ईमानको कुनै महत्व छैन ।

(१४४) हामीले तपाईंको अनुहारलाई आकाशतिर पटक-पटक फर्कंदै गरेको देखिराखेका छौं । अव हामीले तपाईंलाई त्यस क़िब्लातिर फर्काउनेछौं, जसवाट तपाईं प्रसन्न हुनु हुनेछ । तपाईं आफ्नो अनुहार मस्जिदे हराम (काअ़्बा) तिर फर्काउनुहोस् तथा तपाईं जहाँ भएपनि आफ्नो अनुहार उसैतिर फर्काउने गर्नुस् । अहले किताबलाई यो कुरा अल्लाहको तर्फबाट सत्य हुने कुराको वास्तविक ज्ञान छ ।[1] तथा अल्लाह तआ़ला ती कर्महरूवाट अचेत छैन, जुन यिनीहरू गर्दछन् ।

قَدْ نَرٰى تَقَلُّبَ وَجْهِكَ فِي السَّمَآءِ ۚ فَلَنُوَلِّيَنَّكَ قِبْلَةً تَرْضٰىهَا ۖ فَوَلِّ وَجْهَكَ شَطْرَ الْمَسْجِدِ الْحَرَامِ ۗ وَحَيْثُ مَا كُنْتُمْ فَوَلُّوْا وُجُوْهَكُمْ شَطْرَهٗ ۗ وَاِنَّ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ لَيَعْلَمُوْنَ اَنَّهُ الْحَقُّ مِنْ رَّبِّهِمْ ۗ وَمَا اللّٰهُ بِغَافِلٍ عَمَّا يَعْمَلُوْنَ ﴿١٤٤﴾

(१४५) तथा तपाईं यदि अहले किताबलाई सबै प्रमाण प्रस्तुत गरिदिनुस् तैपनि उनीहरू तपाईंको क़िब्लाको अनुकरण गर्ने छैनन् ।[2] तथा न त तपाईंले उनीहरूको क़िब्लालाई अनुसरण गर्नुहुन्छ[3] न यिनीहरु आपसमा एक-अर्काको क़िब्लालाई

وَلَئِنْ اَتَيْتَ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ بِكُلِّ اٰيَةٍ مَّا تَبِعُوْا قِبْلَتَكَ ۚ وَمَا اَنْتَ بِتَابِعٍ قِبْلَتَهُمْ ۚ وَمَا بَعْضُهُمْ بِتَابِعٍ قِبْلَةَ بَعْضٍ ۗ وَلَئِنِ

ईमानको महत्व त्यतिखेर नै छ जव नमाज़ तथा अन्य अल्लाहका आदेशहरूको अनुपालन हुनेछ ।

[1]अहले किताबका विभिन्न धार्मिक पुस्तकहरूमा ख़ानये काअ़बा अन्तिम नबीको क़िब्ला हुने कुराको स्पष्ट संकेत विद्यमान छन् । यसैकारण यसको सत्य हुने कुरो उनीहरूलाई निश्चित रुपले ज्ञात थियो, तर उनीहरूको वंशीय घमण्ड तथा ईर्ष्या सत्य कुरालाई स्वीकार्नमा वाधित वन्न गयो ।

[2]किनभने यहूदीहरूको विरोधको आधार ईर्ष्या तथा द्वेष हो, यसकारण उनीमथि प्रमाणको कुनै प्रभाव पर्ने छैन । अर्थात् कुनै कुराबाट प्रभावित हुनलाई आवश्यक छ कि मनुष्यको हृदय स्वच्छ होस् ।

[3]किनभने तपाईं सल्लल्लाहु अलैहि वसल्लम अल्लाहका वह्यी (प्रकाशनाहरू) का पालन गर्नेवाला हुनुहुन्छ, जवसम्म तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई अल्लाहको तर्फवाट यस्तो आदेश प्राप्त हुँदैन, तपाईं सल्लल्लाहु अलैहि वसल्लम उनीहरूको क़िब्लालाई किन अपनाउन सक्नुहुन्छ ?

اتَّبَعْتَ أَهْوَاءَهُم مِّن بَعْدِ مَا جَاءَكَ مِنَ الْعِلْمِ ۙ إِنَّكَ إِذًا لَّمِنَ الظَّالِمِينَ ﴿١٤٥﴾

मान्छन् ।[1] यदि तपाईं यस उपरान्त जबकि तपाईंको पासमा ज्ञान आइसकेको छ, तैपनि उनीहरूका इच्छाहरूको तृप्तिका लागि अनुकरण गर्न थाल्नुभयो भने निःसन्देह तपाईं पनि अत्याचारीमध्ये हुनुहुनेछ ।[2]

الَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ يَعْرِفُونَهُ كَمَا يَعْرِفُونَ أَبْنَاءَهُمْ ۖ وَإِنَّ فَرِيقًا مِّنْهُمْ لَيَكْتُمُونَ الْحَقَّ وَهُمْ يَعْلَمُونَ ﴿١٤٦﴾

(१४६) जसलाई हामीले किताब प्रदान गरेका छौं, उनीहरू त यसलाई यसरी चिन्दछन्, जस्तो कोही आफ्ना पुत्रहरूलाई चिन्दछ, उनीहरूको एक गुट सत्यलाई पहिचान गरी फेरि लुकाउँछ ।[3]

الْحَقُّ مِن رَّبِّكَ ۖ فَلَا تَكُونَنَّ مِنَ الْمُمْتَرِينَ ﴿١٤٧﴾

(१४७) तपाईंको प्रभुको तर्फबाट साक्षात सत्य छ सावधान ! तपाईं सन्देह गर्नेहरू मध्ये नहुनुहोला ।[4]

وَلِكُلٍّ وِجْهَةٌ هُوَ مُوَلِّيهَا ۖ فَاسْتَبِقُوا الْخَيْرَاتِ ۚ

(१४८) तथा प्रत्येक व्यक्ति एक न एकतिर आकृष्ट भइराखेको छ ।[5] तिमी पुण्यतिर दगुर

[1]यहूदीहरूको क़िब्ला शिला बैतुल मक़दिस तथा इसाईहरुरूको बैतुल मक़दिसको पूर्वी भाग हो । जब अहले किताबका यी दुई गुट पनि एक क़िब्लामा सहमत छैनन भने मुसलमानहरूसित किन आशा गर्दछन् कि उनीहरू यस विषयमा तिनीहरूको पक्ष लिनेछन् ।

[2]यो चेतावनी गुज्रिसकेको छ, उद्देश्य समुदायलाई सतर्क गर्नु हो कि कुर्आन तथा हदीसको ज्ञानको उपरान्त अहले बिदअत (आधुनीकीकरण गर्नेवाला) को पछि लाग्नु अत्याचार तथा मार्ग-विचलन हो ।

[3]यहाँ अहले किताबको एक गुटलाई सत्य लुकाउने अपराधी भनिएको छ, किनभने उनीहरूमा एक गुट अब्दुल्लाह बिन सलाम जस्ता मानिसहरूको पनि थियो जसले आफ्नो सत्य एवं शुद्ध हृदयका कारण इस्लाम धर्म धारण गरे ।

[4]पैग़म्बरमाथि अल्लाहको तर्फबाट जुनसुकै आदेश अवतरित हुन्छ, निःसन्देह सत्य छ, त्यसमा शंका वा सन्देहको कुनै लेशमात्र पनि स्थान छैन ।

[5]अर्थात् प्रत्येक धर्मवालाले आफ्नो प्रिय क़िब्ला बनाईसकेको छ, जसतिर त्यो मुख फर्काउँछ । एक अन्य भावार्थ यो हो कि प्रत्येक धर्मका मानिसहरूले आफ्ना एउटा संविधान तथा विधि बनाईसकेका छन्, जस्तो कुर्आन मजीदको अन्य स्थानमा छ ।

أَيْنَ مَا تَكُونُوا يَأْتِ بِكُمُ اللَّهُ جَمِيعًا ۚ إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿١٤٨﴾

तिमीहरू जहाँ भएपनि रहे पनि, अल्लाहले तिमीहरूलाई एकत्रित गर्नेछ । अल्लाह (तआ़ला) लाई हरेक कुराको सामर्थ्य छ ।

وَمِنْ حَيْثُ خَرَجْتَ فَوَلِّ وَجْهَكَ شَطْرَ الْمَسْجِدِ الْحَرَامِ ۖ وَإِنَّهُ لَلْحَقُّ مِن رَّبِّكَ ۗ وَمَا اللَّهُ بِغَافِلٍ عَمَّا تَعْمَلُونَ ﴿١٤٩﴾

(१४९) तथा तपाई जहाँबाट निस्कनु हुन्छ आफ्नो अनुहार मस्जिदे हरामतिर फर्काउने गर्नुस्, यही सत्य हो तपाईंको प्रभुको तर्फबाट । जे-जति तिमी गरिराखेका छौ, त्यसबाट अल्लाह (तआ़ला) अनभिज्ञ छैन ।

وَمِنْ حَيْثُ خَرَجْتَ فَوَلِّ وَجْهَكَ شَطْرَ الْمَسْجِدِ الْحَرَامِ ۚ وَحَيْثُ مَا كُنتُمْ فَوَلُّوا وُجُوهَكُمْ شَطْرَهُ

(१५०) तथा तपाईं हे (मुहम्मद) ! जहाँबाट निस्कनु हुन्छ, आफ्नो अनुहार मस्जिदे हरामतर्फ फर्काउने गर्नुस[1] तथा जहाँसुकै तिमी हे (मुहम्मद) ! भएपनि आफ्नो मुख त्यत

﴿لِكُلٍّ جَعَلْنَا مِنكُمْ شِرْعَةً وَمِنْهَاجًا ۚ وَلَوْ شَاءَ اللَّهُ لَجَعَلَكُمْ أُمَّةً وَاحِدَةً وَلَٰكِن لِّيَبْلُوَكُمْ فِي مَا آتَاكُمْ ۖ﴾ (सूरः अल-मायदः-४८) अर्थात् अल्लाह तआ़लाले मार्गदर्शन तथा मार्गभ्रंश दुबैको स्पष्टीकरणको पश्चात, मनुष्यलाई ती दुबै मध्येबाट कुनैलाई अपनाउने कुराको जुन स्वतन्त्रता प्रदान गरेको छ, त्यसको कारण विभिन्न विधि तथा नियम मानिसहरूले बनाइहालेका छन्, जुन एक-अर्कासित भिन्न छन् । अल्लाह तआ़लाले चाहेको भए एउटै मार्गमा नै सहमत गरिदिन्थ्यो तर यो अधिकारहरूबाट बञ्चित नगरी सम्भव थिएन तथा अधिकार दिनुको तात्पर्य तिनको परीक्षा लिनु हो । यसकारण हे मुसलमानहरू ! तिमी भलाईहरूतिर अगाडि रह अर्थात् पुण्य तथा भलाईको मार्गमा अग्रसर रह तथा यो अल्लाहको वह्‌यी (प्रकाशना) तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको मार्गको अनुकरण गर, यही सत्य मार्ग हो, जसबाट अन्य धर्मावलम्बी बञ्चित छन् ।

[1]क़िब्लातिर मुख फर्काउने आदेशलाई तीन पटक दोहोऱ्याइएको छ । या त यसमाथि जोड दिन तथा महत्व दर्शाउन अथवा यो आदेश निरस्तीकरणको प्रथम अनुभव थियो । यसकारण मानसिक संशयलाई हटाउनको निम्ति आवश्यक थियो कि यसलाई पटक-पटक दोहोऱ्याएर मस्तिष्कमा बसालिदिइयोस् । अथवा विभिन्न कारणहरूले यस्तो गरियो । एक कारण नबी सल्लल्लाहु अलैहि वसल्लमको इच्छा तथा प्रसन्नता थियो, त्यहाँ यसलाई वर्णित गरियो । दोस्रो कारण प्रत्येक समुदायको व्यक्ति तथा आमन्त्रित गर्नेवालाको लागि एक स्थाई केन्द्रको स्थापना हो, त्यहाँ यसलाई दोहोऱ्याइयो, तेस्रो कारण विरोधीहरूका आरोपलाई खण्डन गर्नको लागि वर्णन गरियो । (फ़तहुल क़दीर)

لِئَلَّا يَكُونَ لِلنَّاسِ عَلَيْكُمْ حُجَّةٌ إِلَّا الَّذِينَ ظَلَمُوا مِنْهُمْ فَلَا تَخْشَوْهُمْ وَاخْشَوْنِي وَلِأُتِمَّ نِعْمَتِي عَلَيْكُمْ وَلَعَلَّكُمْ تَهْتَدُونَ ﴿١٥٠﴾

तिर फर्काउने गर, ताकि मानिसहरूलाई कुनै आपत्ति तिम्रो विरोधमा शेष नरहोस्।[1] उनीहरूबाहेक जसले उनीहरूमध्ये अत्याचार गरेका छन्[2] तिमी उनीसित नतर्स।[3] मसित नै तर्स ताकि म आफ्नो अनुकम्पा तिमीमाथि पूरा गर्न सकुँ तथा यसकारण पनि कि तिमी मार्गदर्शन प्राप्त गर्न सक।

كَمَا أَرْسَلْنَا فِيكُمْ رَسُولًا مِّنكُمْ يَتْلُوا عَلَيْكُمْ آيَاتِنَا وَيُزَكِّيكُمْ وَيُعَلِّمُكُمُ الْكِتَابَ وَالْحِكْمَةَ

(१५१) जुनप्रकार[4] हामीले तिमीमाँझ तिमीमध्येबाटै रसूल (ईशदूत–मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम) लाई पठायौं, जो हाम्रा आयतहरू (पवित्र कुरआनका सूत्र) तिम्रा समक्ष पाठ गर्दछ र तिमीलाई शुद्ध

[1]अर्थात् अहले किताब यो भन्न नसकून् कि हाम्रा किताबहरूमा त उनको क़िब्ला ख़ानये-काअ़बा छ तथा नमाज़ यिनी बैतुल मक़्दिसतिर मुख फर्काइ पढ्दछन्।

[2]यहाँ ظلموا सित तात्पर्य द्वेष तथा ईर्ष्या गर्नेवाला मानिसहरू हुन्। अर्थात् अहले किताब मध्येबाट जो द्वेष राख्नेवाला छन् उनी यो जानीसके उपरान्त कि अन्तिम पैग़म्बरको क़िब्ला ख़ानये-काअ़बा नै हुनेछ, ईर्ष्या तथा द्वेषका कारण भन्नेछन् कि बैतुल मक़्दिसको सट्टा ख़ानये-काअ़बालाई आफ्नो क़िब्ला बनाएर यो पैग़म्बर अन्तत: आफ्नो पूर्वजहरूको धर्मतिरै आकृष्ट भइहालेको छ तथा केहीका दृष्टिमा यसबाट तात्पर्य मक्काका मूर्तिपूजक हुन्।

[3]अत्याचारीहरूसित नतर्स, अर्थात् मूर्तिपूजकहरूका कुराको चिन्ता नगर। उनीहरूले भनेका थिए कि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) ले हाम्रो क़िब्ला अपनाइहालेको छ। निकट भविष्यमा हाम्रो धर्म पनि अपनाइहाल्ने छ। "मसित नै तर्सने गर।" जुन आदेश दिँदै गर्छु, त्यसमाथि निर्भीक भई कुनै प्रकारको चिन्ता नगरिकन कर्म गर्दै जाउ। क़िब्लाको परिवर्तनलाई मार्गदर्शन प्राप्त गर्नुसित तुलना गरिएको छ। भनिएको छ कि अल्लाहको आदेशानुसार कर्म गर्नाले नि:सन्देह मनुष्य समृद्धि तथा पुरस्कारको अधिकारी पनि बन्दछ तथा त्यसलाई मार्गदर्शन प्राप्त हुने सौभाग्य पनि प्राप्त हुन्छ।

[4] كما (जुनप्रकार) को सम्बन्ध पूर्व कथनसित छ, अर्थात् यो सबै सुख: समृद्धि तथा मार्गदर्शनको सौभाग्य तिमीलाई यसप्रकार प्राप्त भयो जुनप्रकार यसभन्दा पहिला तिम्रो माझमा ती मध्येबाट एक रसूल पठाइयो, जो तिम्रो शुद्धिकरण गर्दछ। किताब तथा बुद्धिमत्तताको शिक्षा दिन्छ र जुन कुरोको तिमीलाई ज्ञान छैन, त्यो सिकाउँदछ।

وَيُعَلِّمُكُم مَّا لَمْ تَكُونُوا تَعْلَمُونَ ﴿١٥١﴾

गर्दछ, एवं तिमीलाई पुस्तक तथा बुद्धि एवं ती कुराको जसबाट तिमीहरू अज्ञान थियौ, ज्ञान दिराखेको छ ।

فَاذْكُرُونِي أَذْكُرْكُمْ وَاشْكُرُوا لِي وَلَا تَكْفُرُونِ ﴿١٥٢﴾

(१५२) यसकारण तिमी मलाई स्मरण गर, म पनि तिमीलाई याद गर्नेछु, तथा म प्रति कृतज्ञ रह एवं कृतघ्नताबाट बच ।[1]

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اسْتَعِينُوا بِالصَّبْرِ وَالصَّلَاةِ ۚ إِنَّ اللَّهَ مَعَ الصَّابِرِينَ ﴿١٥٣﴾

(१५३) हे निष्ठावानहरू हो ! धैर्य तथा नमाज़द्वारा सहायता खोज, अल्लाह (तआ़ला) धैर्यवान्हरूको साथ दिन्छ ।[2]

[1]अत: तिमी यी सुख, समृद्धिहरूको फलस्वरुप मेरो वर्णन तथा कृतज्ञता व्यक्त गरिराख । सुख-समृद्धिहरूमा कृतघ्नता नगर । वर्णनको अर्थ हो, प्रत्येक क्षण अल्लाहलाई याद गर्नु, अर्थात् त्यसको तस्वीह (पवित्रता), तहलील (एकता) तथा तक्बीर (महिमा) का शव्दहरूको उच्चारण गर्नु तथा कृतज्ञताको अर्थ हो अल्लाहले प्रदान गरेको शक्ति तथा स्फूर्तिलाई उसको आज्ञा-पालनमा खर्च गर्नु हो । अल्लाहवाट प्रदान गरिएको शक्तिलाई अल्लाहका आदेशहरूको अवहेलनामा खर्च गर्नु यो अल्लाह प्रतिको कृतघ्नता हो । कृतज्ञता व्यक्त गर्नुमा अन्य उपकारहरूको शुभ-सूचना तथा कृतघ्नता कठोर यातनाको चेतावनी हो । ﴿لَئِن شَكَرْتُمْ لَأَزِيدَنَّكُمْ ۖ وَلَئِن كَفَرْتُمْ إِنَّ عَذَابِي لَشَدِيدٌ﴾ (सूर: इब्राहीम-७)

[2]मनुष्यका दुईटा परिस्थितिहरू हुन्छन् । सुख-सुविधा (समृद्धि) अथवा दुख एवं विपदा । सुखमा अल्लाहको कृतज्ञता व्यक्त गर्नमा जोड तथा दुखमा धैर्य तथा अल्लाहसित सहायता प्राप्त गर्ने कुरोमा जोड छ । हदीसमा छ, "ईमानवालाको समस्या विचित्र छ, त्यसलाई प्रसन्नता प्राप्त हुन्छ भने अल्लाहप्रति कृतज्ञता व्यक्त गर्दछ तथा दुख पुग्दछ भने धैर्यले काम लिन्छ । दुवै परिस्थितिहरू उसको लागि पुण्यकारी छन् ।" (सहीह मुस्लिम कितावुल जोहद वा अर-रकाएक वाव-अल-मोमिन अमरुहु कुल्लुहू ख़ैर, हदीस संख्या २९९९) धैर्य दुई प्रकारको हुन्छ । एक निषेध तथा पापको परित्याग तथा त्यसवाट सुरक्षित रहनको कारण जसवाट स्वादको वलिदान तथा अस्थायी लाभहरूको हानि हुन्छ, तिनमा धैर्य । दोस्रो अल्लाहका आदेशहरूको पालना गर्नुमा जुन कठिनाई आउँछ, उनलाई धैर्यका साथ सहन गर्नु । केही मानिसहरूले यसको तुलना यसप्रकार गरेका छन्, अल्लाहका प्रिय कुराको पालन गर्नु, चाहे इन्द्रिय अथवा शारीरिक रूपले जतिसुकै कष्टदायक किन नहोऊन् तथा अल्लाहलाई अप्रिय लाग्ने कुराहरूवाट वच्नु पर्दछ, इच्छाहरू तथा स्वादले त्यसलाई चाहे जति नै तानून् । (इब्ने क़सीर)

(१५४) तथा अल्लाह (तआ़ला) को मार्गमा शहीद हुनेहरूलाई मृतक नभन,[1] उनीहरू जीवित छन् तर तिमी बुझ्दैनौ ।

وَلَا تَقُولُوا لِمَنْ يُقْتَلُ فِي سَبِيلِ اللَّهِ أَمْوَاتٌ بَلْ أَحْيَاءٌ وَلَٰكِن لَّا تَشْعُرُونَ ﴿١٥٤﴾

(१५५) तथा हामीले कुनै न कुनै प्रकारले तिम्रो परीक्षा लिनेछौं, शत्रुको भयले, भोक-प्यासले, धन तथा प्राण एवं फलहरुको कमीले तथा हे मुहम्मद ! धैर्य राख्नेहरूलाई शुभ-सूचना दिनुस् ।

وَلَنَبْلُوَنَّكُم بِشَيْءٍ مِّنَ الْخَوْفِ وَالْجُوعِ وَنَقْصٍ مِّنَ الْأَمْوَالِ وَالْأَنفُسِ وَالثَّمَرَاتِ ۗ وَبَشِّرِ الصَّابِرِينَ ﴿١٥٥﴾

(१५६) उनीहरूलाई जतिखेर पनि कुनै कठिनाई आउँछ त भनिदिने गर्छन् कि हामी त स्वयं अल्लाह (तआ़ला) कै धरोहर हौं तथा हामी उसैतिर फर्केर जानेछौं ।

الَّذِينَ إِذَا أَصَابَتْهُم مُّصِيبَةٌ قَالُوا إِنَّا لِلَّهِ وَإِنَّا إِلَيْهِ رَاجِعُونَ ﴿١٥٦﴾

(१५७) उनीमाथि उनको पोषकको दया एवं कृपा छ तथा यिनीहरू नै मार्ग-प्रदर्शित छन् । (सत्य-मार्गमा छन्)[2]

أُولَٰئِكَ عَلَيْهِمْ صَلَوَاتٌ مِّن رَّبِّهِمْ وَرَحْمَةٌ ۖ وَأُولَٰئِكَ هُمُ الْمُهْتَدُونَ ﴿١٥٧﴾

(१५८) अवश्य सफ़ा (पर्वत) एवं मरवह (पर्वत) अल्लाह (तआ़ला) का निशानीहरू (चिनो) मध्ये

إِنَّ الصَّفَا وَالْمَرْوَةَ مِن شَعَائِرِ اللَّهِ ۖ فَمَنْ حَجَّ الْبَيْتَ أَوِ اعْتَمَرَ

[1]शहीदहरूलाई मरेको नभन्नु तिनका मान-सम्मानको लागि हो । यो जीवन बरज़ख़ (आलोक-परलोकको मध्यमको जीवन हो ) जसलाई बुझ्न हाम्रो बुद्धि असमर्थ छ । यो जीवन सम्मानका अनुसार नबीहरू, ईमानवालाहरु यहाँसम्मकि काफ़िरहरूलाई पनि प्राप्त छ । शहीदको आत्मा तथा केही कथनहरूका अनुसार ईमानवालाहरूका आत्मा पनि एउटा पंक्षीको वक्षमा, स्वर्गमा जहाँ चाहन्छ घुम्छ । (इब्ने कसीर तथा सूर: आले-इमरान १६९ हेर्नुस्)

[2]यी आयतहरूमा धैर्य राख्नेहरूका लागि शुभ-सूचनाहरू छन् । हदीसमा विपदाको समय ﴿إِنَّا لِلَّهِ وَإِنَّا إِلَيْهِ رَاجِعُونَ﴾ को साथ लाई «اللَّهُمَّ أْجُرْنِي فِي مُصِيبَتِي وَاخْلُفْ لِي خَيْرًا مِنْهَا» पढ्नुको पनि विशेषतामा जोड दिइएको छ । (सहीह मुस्लिम किताबुल जनायज़ बावमा युकाल इन्दल मुसीब: हदीस संख्या ९१८)

فَلَا جُنَاحَ عَلَيْهِ أَن يَطَّوَّفَ بِهِمَا ۚ وَمَن تَطَوَّعَ خَيْرًا فَإِنَّ اللَّهَ شَاكِرٌ عَلِيمٌ ﴿١٥٨﴾

हुन्,[1] यसकारण अल्लाहको घरको हज़ तथा उम्रा गर्ने व्यक्तिहरूमाथि यिनको परिक्रमा गर्नुमा पनि कुनै पाप छैन ।[2]आफ्नो प्रसन्नताले पुण्य गर्नेलाई अल्लाह सम्मान गर्दछ तथा उनीहरूलाई राम्ररी जान्नेवाला छ ।

إِنَّ الَّذِينَ يَكْتُمُونَ مَا أَنزَلْنَا مِنَ الْبَيِّنَاتِ وَالْهُدَىٰ مِن بَعْدِ مَا بَيَّنَّاهُ لِلنَّاسِ فِي الْكِتَابِ ۙ أُولَٰئِكَ يَلْعَنُهُمُ اللَّهُ وَيَلْعَنُهُمُ

(१५९) जुन मानिसहरू हाम्रा अवतरित खुल्ला निशानीहरू एवं निर्देशहरूलाई लुकाउँछन् यस उपरान्त जबकि हामीले त्यसलाई आफ्नो किताब (पवित्र कुरआन) मा मानिसहरूका निम्ति वर्णन गरिसकेका छौं । तिनीहरूमाथि

---

[1] شعائر वहुवचन شعيرة को हो, जसको अर्थ हो चिन्ह, यहाँ हज़का नियम (जस्तै अरफ़ातमा रूक्नु, सअई गर्नु, सफ़ा-मरवह पर्वतहरू वीच निर्धारित मार्गको परिक्रमा गर्नु, स-साना ढुङ्गा हान्नु, वलि दिनु) सित तात्पर्य छ, जुन अल्लाह तआ़लाले निर्धारित गरेको छ ।

[2]सफ़ा तथा मरवह बीच सअई गर्नु, हज़को एउटा स्तम्भ हो । तर कुरआ़नका शव्दहरूमा (कुनै पाप होइन) सित केही सहावालाई शंका भयो कि शायद यो आवश्यक छैन । आदरणीया आयशा (रज़ीयल्लाह अन्हा) को ज्ञानमा जब यो कुरा आयो त उहाँले भन्नुभयो कि यदि यसको अर्थ यो भएको भए अल्लाह तआ़ला यसप्रकार आदेश गर्थ्यो । (فَلَا جُنَاحَ عَلَيْهِ أَنْ لَا يَطَّوَّفَ بِهِمَا) यदि उनको परिक्रमा गरिदैन भने कुनै पाप छैन । अनि त्यसको अवतरित हुने विशेषताको वर्णन गर्नु भयो कि मदीना निवासी अन्सार, इस्लाम धर्म धारण गर्नुभन्दा पूर्व भ्‌ठो मूर्ति मनातको नामको उच्चारण गर्दथे, जसको पूजा उनीहरू मुशल्ल पर्वतमा गर्दथे । तथा फेरि मक्का पुगेर यस्ता मानिसहरू सफ़ा-मरवहका मध्य सअई (परिक्रमा) गर्नु पाप ठान्दथे । मुसलमान भईहाले पश्चात उनीहरूले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित सोधे तव यो आयत अवतरित भयो जसमा भनिएको छ कि सफ़ा-मरवह मध्य सअई (परिक्रमा) गर्नु कुनै पाप छैन । (सहीह वुखारी कितावुल हज्ज व वजूव अलस्सफा वल मरवह) केही मानिसहरूको यसको पृष्ठभूमिमा यो वताएका छन् कि अज्ञानकालमा केही मानिसहरूले सफा पर्वतमा एउटा मूर्ति (इसाफ) तथा मरवह पर्वतमा नायला नाम गरेकी मूर्ति राखेका थिए जसलाई उनीहरू सअईको मध्यमा चुम्वन गर्दथे अथवा स्पर्श गर्दथे जव ती मुसलमान भए त उनीहरूले ठाने कि सफा-मरवहको मध्य सअई पाप हुन्छ किनभने इस्लामभन्दा पूर्व दुई मूर्तिहरूकै कारण सफा-मरवह वीच सअई गर्दथे । अल्लाह तआ़लाले यस आयतमा उनको यस चिन्ता तथा शंकालाई हटाईदियो । अव यो सअई आवश्यक छ । सफावाट प्रारम्भ भई मरवहमा समाप्त हुन्छ । (ऐसरुत्तफ़ासीर)

اللّٰعِنُوْنَ ﴿١٥٩﴾

अल्लाहको तथा सबै धिक्कार्नेहरूको धिक्कार छ ।[1]

إِلَّا الَّذِيْنَ تَابُوْا وَأَصْلَحُوْا وَبَيَّنُوْا فَأُولٰٓئِكَ أَتُوْبُ عَلَيْهِمْ ۚ وَأَنَا التَّوَّابُ الرَّحِيْمُ ﴿١٦٠﴾

(१६०) तर ती मानिसहरू जो तौबा (क्षमा-याचना) गर्दछन् तथा सुधार गर्दछन् एवं वर्णन गर्दछन्, त म उनीहरूको तौबा स्वीकार गर्दछु तथा म क्षमा-याचना स्वीकार कर्ता तथा अत्यन्त दयालु छ ।

إِنَّ الَّذِيْنَ كَفَرُوْا وَمَاتُوْا وَهُمْ كُفَّارٌ أُولٰٓئِكَ عَلَيْهِمْ لَعْنَةُ اللّٰهِ وَالْمَلٰٓئِكَةِ وَالنَّاسِ أَجْمَعِيْنَ ﴿١٦١﴾

(१६१) निःसन्देह जो काफ़िर (अस्वीकार गर्नेहरू) कुफ्रको स्थितिमा मर्छन्, उनीमाथि अल्लाहको तथा फरिश्ताहरूको एवं सबै व्यक्तिहरूको धिक्कार छ ।[2]

خٰلِدِيْنَ فِيْهَا ۚ لَا يُخَفَّفُ عَنْهُمُ الْعَذَابُ وَلَا هُمْ يُنْظَرُوْنَ ﴿١٦٢﴾

(१६२) यसै दशामा उनीहरू सधैं रहनेछन् न त उनीहरूको यातना घटाइने छ तथा न उनीहरूलाई छुट नै प्राप्त हुनेछ ।

---

[1]अल्लाह तआलाले जुन कुरा आफ्नो किताबमा अवतरित गरेको छ, तिनलाई लुकाउनु यति ठूलो अपराध हो कि अल्लाहले धिक्कार्नु बाहेक अन्य धिक्कार्नेहरूद्वारा पनि धिक्कारिन्छ । हदीसमा छ (مَنْ سُئِلَ عَنْ عِلْمٍ فَكَتَمَهُ، أُلْجِمَ يَوْمَ الْقِيَامَةِ بِلِجَامٍ مِنْ نَارٍ) (अबू-दाऊद किताबुल इल्म बाब कराहीय: मनइल इल्मे, तिर्मिजी–हदीस संख्या ६५१, तथा भन्दछन् हदीस हसन हो) जोसित कुनै यस्तो कुरा सोधियो जसको ज्ञान उसलाई थियो तर उसले त्यसलाई लुकायो, त केयामतका दिन आगोको लगाम उसको मुखमा हालिनेछ ।

[2]यसबाट विदित भयो कि जुन कुराको विषयमा सुनिश्चित ज्ञान छ कि उसको निधन कुफ्रमा भएको छ, उसमाथि धिक्कार भन्न सकिन्छ । तर त्यसको अतिरिक्त कुनै घोर पापी मुसलमानमाथि धिक्कार उचित छैन किनभने सम्भव छ कि उसले निधनभन्दा अगाडि क्षमा-याचना गरिहालेको होस् अथवा अल्लाहले त्यसका अन्य पुण्य-कर्महरूका कारण त्यसको पाप क्षमा गरिदिएको होस् जसको ज्ञान हामीलाई हुन सक्दैन । हो, जुन कुकर्महरूमाथि धिक्कारको शब्द आएको छ, ती कुकर्मीहरूको विषयमा यो उनले यसको क्षमा-याचना गरेनन् भने अल्लाहको सदनमा तिरष्कृत हुन सक्छन् ।

وَإِلَٰهُكُمْ إِلَٰهٌ وَاحِدٌ ۖ لَّا إِلَٰهَ إِلَّا هُوَ الرَّحْمَٰنُ الرَّحِيمُ ﴿١٦٣﴾

(१६३) तथा तिमी सवैको प्रभु, पूज्य एक अल्लाह नै हो, त्यसवाहेक कोही सत्य पूज्य छैन,[1] त्यो अति कृपालु तथा अति दयालु छ।

إِنَّ فِي خَلْقِ السَّمَاوَاتِ وَالْأَرْضِ وَاخْتِلَافِ اللَّيْلِ وَالنَّهَارِ وَالْفُلْكِ الَّتِي تَجْرِي فِي الْبَحْرِ بِمَا يَنفَعُ النَّاسَ وَمَا أَنزَلَ اللَّهُ مِنَ السَّمَاءِ مِن مَّاءٍ فَأَحْيَا بِهِ الْأَرْضَ بَعْدَ مَوْتِهَا وَبَثَّ فِيهَا

(१६४) आकाश तथा धर्तीको रचना, रात-दिनको फेरबदल (अनुवर्तन)डुङ्गाहरूले मानिसहरूलाई लाभ दिने वस्तुहरू लिएर समुद्रमा हिंड्नु, आकाशबाट वर्षा झराली मृत धर्तीलाई जीवित गरिदिनु[2] यसमा प्रत्येक प्रकारका जीवलाई फैलाइदिनु, वायुको दिशा परिवर्तन गर्नु,

[1]यस आयतमा पुन: एकेश्वरवादको आमन्त्रण दिइएको छ। यो एकेश्वरवादको आमन्त्रण मक्कामा मूर्तिपूजकहरूको बुद्धिमा पस्ने कुरो थिएन। उनीहरूले भने ﴿أَجَعَلَ الْآلِهَةَ إِلَٰهًا وَاحِدًا ۖ إِنَّ هَٰذَا لَشَيْءٌ عُجَابٌ﴾ [ص:٥] (सूर: स्वाद)। के उसले यति देवताहरूको स्थानमा एउटा ईष्टदेव वनाईदियो, यो त अचम्मलाग्दो कुरा हो। यसकारण आउने आयतमा त्यसको एक हुने कुराको प्रमाण तथा तर्क वर्णन गरिदैछन्।

[2]यो आयत यस आधारमा अति परिपूर्ण छ कि सृष्टिको रचना तथा त्यसको नियन्त्रण एवं संचालनको सम्वन्धमा सात विशेष कुराहरूको एकत्रित वर्णन छ जुन कुनै अन्य आयतमा छैन। (१)– आकाश तथा धर्तीको उत्पत्ति, जसको विस्तार तथा प्रसारको वर्णनको कुनै आवश्यकता छैन। (२)– रात तथा दिन, एकपछि अर्कोको आगमन, दिनमा प्रकाश तथा रातमा अन्धकार गर्नु ताकि जीवनयापनको लागि व्यापार पनि हुन सकोस् तथा विश्राम पनि। अनि रात लामो तथा दिन छोटो हुनु अनि त्यसको विपरीत दिन लामो तथा रात छोटो हुनु। (३)– समुद्रमा डुङ्गा तथा जहाज चल्नु, जसको कारण व्यापारिक यात्रा पनि हुन्छ तथा अधिक मात्रामा खाद्य सामग्री पनि एक स्थानवाट अर्को स्थानलाई स्थानतरित हुन्छ। (४)– वर्षा जुन धर्तीको उपज तथा सिंचाईको लागि अति आवश्यक छ। (५)– हरेक प्रकारका जीव-जन्तुहरूको जन्म जो यातायात, कृषि तथा युद्धमा प्रयोग हुन्छन् तथा मनुष्यको भोजनको लागि एउटा ठूलो भाग यिनीवाट पूरा हुन्छ। (६)– हरेक प्रकारको वायु, चिसो पनि गरम पनि, प्रयोग योग्य पनि तथा निष्प्रयोग पनि, पूर्वी पश्चिमी पनि तथा उत्तर-दक्षिणी पनि, मनुष्यको जीवन तथा त्यसको आवश्यकता अनुसार। (७)– मेघ जसलाई अल्लाह तआ़ला जहाँ चाहन्छ वृष्टि गराउँछ। यी सवै कुराहरू के अल्लाह तआ़लाको एक हुने कुराको प्रमाणहरू होइनन्? अवश्य प्रमाण हुन्। के त्यसको यस निमन्त्रण तथा संचालनमा उसको कोही साझेदार छ? होइन, कदापि होइन। त फेरि यसलाई छाडि अन्यलाई ईष्टदेव तथा कष्ट निवारक ठान्नु कहाँको बुद्धिमानी हो?

مِنۡ كُلِّ دَآبَّةٍ وَّتَصۡرِيۡفِ الرِّيٰحِ وَالسَّحَابِ الۡمُسَخَّرِ بَيۡنَ السَّمَآءِ وَالۡاَرۡضِ لَاٰيٰتٍ لِّقَوۡمٍ يَّعۡقِلُوۡنَ

तथा बादल जो आकाश तथा धर्तीमध्ये नियुक्त छन्, यसमा बुद्धिमानीहरूका लागि अल्लाहको सामर्थ्यका चिन्ह छन् ।

وَمِنَ النَّاسِ مَنۡ يَّتَّخِذُ مِنۡ دُوۡنِ اللّٰهِ اَنۡدَادًا يُّحِبُّوۡنَهُمۡ كَحُبِّ اللّٰهِ ؕ وَالَّذِيۡنَ اٰمَنُوۡۤا اَشَدُّ حُبًّا لِّلّٰهِ ؕ وَلَوۡ يَرَى الَّذِيۡنَ ظَلَمُوۡۤا اِذۡ يَرَوۡنَ الۡعَذَابَ ۙ اَنَّ الۡقُوَّةَ لِلّٰهِ جَمِيۡعًا ۙ وَّاَنَّ اللّٰهَ شَدِيۡدُ الۡعَذَابِ

(१६५) तथा केही मानिसहरू यस्ता पनि छन्, जसले अल्लाहका साझेदार अन्यलाई ठहराई तिनीहरूसित यस्तो प्रेम गर्दछन्, जस्तो प्रेम अल्लाहसित हुनुपर्छ ।[1] तथा ईमानवाला (निष्ठावान) अल्लाहसित प्रेममा दृढ हुन्छन् ।[2] काश कि मूर्तिपूजक यो जान्नेभए,जवकि अल्लाहका यातनाहरूलाई देखेर (जान्ने छन्) कि सबै सामर्थ्य अल्लाहलाई न

[1]उपरोक्त प्रत्यक्ष प्रमाणहरू तथा अकाट्य तर्कहरूको पश्चात यस्ता मानिसहरू छन्, जो अल्लाहसँग अन्यलाई उसको साझेदार बनाइहाल्छ । तथा उनीहरूसित उस्तै माया गर्दछन्, जुनप्रकारले अल्लाहलाई गर्नुपर्छ । मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको समयमै मात्र यस्तो थिएन । शिर्कका यी प्रदर्शक आज पनि छन्, वरु इस्लामका नाम लिनेहरूका हृदयमा पनि यो रोगले जरा गाडिसकेको छ । उनीहरूले पनि अल्लाहका अतिरिक्त अन्यलाई तथा महात्मा, पीर, फ़कीर तथा सज्जादा नशीनहरूलाई आफ्नो संकटमोचन, कष्टनिवारक तथा चिन्ताहरण गर्ने बनाइसकेका छन् । वरु उनीहरूलाई त्यसता प्रति प्रेम अल्लाहसितभन्दा पनि अधिक छ । एकेश्वरवादको भाषण उनीहरूलाई पनि यसैप्रकार कष्टदायक प्रतीत हुन्छ, जसको दृश्य अल्लाह तआ़लाले यस आयतमा उतारेको छ ।

﴿وَإِذَا ذُكِرَ اللَّهُ وَحْدَهُ اشْمَأَزَّتْ قُلُوبُ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ وَإِذَا ذُكِرَ الَّذِينَ مِن دُونِهِ إِذَا هُمْ يَسْتَبْشِرُونَ﴾

"तथा जव एक्लो अल्लाहको वर्णन गरिन्छ तव जुन मानिसहरू आख़िरतमा विश्वास गर्दैनन्, उनका हृदय वाँधिन्छन् तथा जव उसको अतिरिक्त अन्यको वर्णन हुन्छ तव प्रसन्न हुन्छन् । (सूर: अल-जुमर-४५)

[2]तर ईमानवालाहरूलाई मूर्तिपूजकहरूका विपरीत अल्लाह तआ़लासित नै अधिक प्रेम हुन्छ । किनभने जव मूर्तिपूजक समुद्रको तूफानमा फँस्छन् त आफ्ना देवी-देवता विर्सन्छन्, त्यहाँ मात्र अल्लाहलाई नै पुकार्दछन् ।

﴿فَإِذَا رَكِبُوا فِي الْفُلْكِ دَعَوُا اللَّهَ مُخْلِصِينَ لَهُ الدِّينَ﴾ (सूर: अनकवूत-६५)

﴿وَإِذَا غَشِيَهُم مَّوْجٌ كَالظُّلَلِ دَعَوُا اللَّهَ مُخْلِصِينَ لَهُ الدِّينَ﴾ (सूर: लुक़मान-३२)

﴿وَظَنُّوا أَنَّهُمْ أُحِيطَ بِهِمْ دَعَوُا اللَّهَ مُخْلِصِينَ لَهُ الدِّينَ﴾ (सूर: यूनुस-२२)

छ तथा अल्लाह (तआला) कठोर यातना दाता हो । (त कदापि मूर्तिपूजा गर्दैनथे)

إِذْ تَبَرَّأَ الَّذِينَ اتُّبِعُوا مِنَ الَّذِينَ اتَّبَعُوا وَرَأَوُا الْعَذَابَ وَتَقَطَّعَتْ بِهِمُ الْأَسْبَابُ ﴿١٦٦﴾

(१६६) जुनबेला मुखियाहरू आफ्ना अनुयायीहरूबाट विरक्त हुनेछन् तथा यातनालाई आफ्नै आँखाले देख्नेछन् तथा सबै सम्बन्ध विच्छेदित हुनेछन् ।

وَقَالَ الَّذِينَ اتَّبَعُوا لَوْ أَنَّ لَنَا كَرَّةً فَنَتَبَرَّأَ مِنْهُمْ كَمَا تَبَرَّءُوا مِنَّا ۗ كَذَٰلِكَ يُرِيهِمُ اللَّهُ أَعْمَالَهُمْ حَسَرَاتٍ عَلَيْهِمْ ۖ وَمَا هُمْ بِخَارِجِينَ مِنَ النَّارِ ﴿١٦٧﴾

(१६७) तथा अनुयायीहरू भन्नेछन्, काश हामी संसारतिर पुन: जान पाउने भए हामी पनि उनीसित यसैप्रकार अलग्ग हुने थियौं, जस्तो यिनीहरू हामीबाट छन् । यसैप्रकार अल्लाह तआला उनीहरूलाई उनको कर्म देखाउने छ। उनको पछुतोको लागि, उनीहरू कदापि नरकबाट निस्कन पाउने छैनन् ।[1]

يَا أَيُّهَا النَّاسُ كُلُوا مِمَّا فِي الْأَرْضِ حَلَالًا طَيِّبًا وَلَا تَتَّبِعُوا خُطُوَاتِ الشَّيْطَانِ ۚ إِنَّهُ لَكُمْ عَدُوٌّ مُبِينٌ ﴿١٦٨﴾

(१६८) मानिसहरू ! धर्तीमा जति पनि वैध तथा पवित्र कुराहरू छन्, तिनलाई खाउ-पिउ। तथा शैतानको मार्गमा नहिंड,[2] त्यो तिम्रो प्रत्यक्ष शत्रु हो ।

[1]मिश्रणवादी परलोकमा धर्मगुरु तथा धर्माचारीहरूको विवशता तथा विश्वासघातमाथि पश्चाताप गर्नेछन्, तर यस पश्चातापको कुनै लाभ हुनेछैन । काश संसारमा नै मिश्रणवादबाट क्षमा-याचना गरेको भए ।

[2]अर्थात् शैतानको अनुगामी बनी अल्लाहबाट अवर्जित गरिएका कुराहरूलाई हराम नभन जस्तो कि मूर्तिपूजकहरूले गरे कि आफ्ना मूर्तिहरूका नाममा समर्पित पशुहरूलाई आफ्नो लागि हराम गर्थे, जसको विस्तृत वर्णन सूर: अल-अन्आममा आउनेछ । अथवा हदीसमा वर्णित छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, अल्लाह तआला आदेश गर्दछ, म आफ्ना भक्तहरूलाई एकेश्वर मान्नेवाला बनाएर सृष्टि गर्यौं, तर शैतानहरूले उनलाई उनीहरूको धर्मबाट विचलित गरिदियो तथा जुन कुराहरू मैले उनीहरूका निम्ति वैध गरेको थिएँ, उनीहरूलाई त्यसले उनीहरूको लागि हराम (अवैध) गरिदियो । (सहीह मुस्लिम किताबुल जन्न: व सिफत नईमिहा व अहलेहा, बाबुस सेफातिल्लती योरफो बिहा फिद्दुन्या अहलुल: जन्न: व अहलुन्नार संख्या-२८६५) ।

(१६९) त्यसले तिमीलाई केवल नराम्रो तथा अश्लीलताको तथा (अल्लाह तआ़ला) बारे ती कुरा भन्न आदेश दिन्छ, जसको तिमीलाई ज्ञान छैन ।

إِنَّمَا يَأْمُرُكُم بِالسُّوءِ وَالْفَحْشَاءِ وَأَن تَقُولُوا عَلَى اللَّهِ مَا لَا تَعْلَمُونَ ﴿١٦٩﴾

(१७०) तथा उनीहरूसित जतिखेर भनिन्छ कि अल्लाह (तआ़ला) बाट अवतरित गरिएको किताब (धर्मशास्त्र) को पालन गर, तब उत्तर दिन्छन् कि हामी त त्यस मार्गको अनुसरण पालन गर्नेछौं, जसमाथि हामीले आफ्ना पूर्वजलाई पायौं, यद्यपि उनीहरूका पूर्वज मूर्ख तथा मार्ग-विचलित रहेका छन् ।[1]

وَإِذَا قِيلَ لَهُمُ اتَّبِعُوا مَا أَنزَلَ اللَّهُ قَالُوا بَلْ نَتَّبِعُ مَا أَلْفَيْنَا عَلَيْهِ آبَاءَنَا أَوَلَوْ كَانَ آبَاؤُهُمْ لَا يَعْقِلُونَ شَيْئًا وَلَا يَهْتَدُونَ ﴿١٧٠﴾

(१७१) र काफ़िर ती पशुहरू सरह छन् जो आफ्ना गोठालाहरूको मात्र पुकार तथा स्वरलाई सुन्दछन् (तर बुझ्दैनन्), उनीहरू बहिरा, लाटा र अन्धा छन्, उनीहरूलाई बुद्धि छैन ।[2]

وَمَثَلُ الَّذِينَ كَفَرُوا كَمَثَلِ الَّذِي يَنْعِقُ بِمَا لَا يَسْمَعُ إِلَّا دُعَاءً وَنِدَاءً صُمٌّ بُكْمٌ عُمْيٌ فَهُمْ لَا يَعْقِلُونَ ﴿١٧١﴾

[1]आज पनि अहले विदअत्‌लाई सम्झाइन्छ कि यी नयाँ वार्ताको धर्ममा कुनै मूल्य छैन त उनीहरू यही उत्तर दिनेछन् कि यी रीति-रिवाज हाम्रा पूर्वजहरूबाटनै चलिआइरहेको छ, यद्यपि पूर्वज पनि धर्मको ज्ञानबाट अनभिज्ञ तथा (मार्ग-दर्शनबाट बञ्चित हुन सक्छन् । यसकारण धार्मिक नियमहरूका प्रमाणका समक्ष पूर्वजहरूको आज्ञापालन, इमामहरूको अनुकरण (विना प्रमाण उनको कुरालाई मान्दै जानु) पूर्णतया मार्ग-विचलन हो, अल्लाह तआ़ला मुसलमानहरूलाई मार्ग-विचलनको दलदलबाट मुक्त गरोस् ।

[2]यी काफ़िरहरूको उदाहरण, जसले आफ्ना पूर्वजहरूका अनुसरणमा आफ्नो वुद्धि र ज्ञानलाई छाडिदिएका छन्, ती पशुहरू समान छन्, जसलाई गोठाला बोलाउँछ र पुकार्दछ, त ती जनावर आवाज त सुन्दछन्, तर यो बुझ्दैनन् कि उनीहरूलाई किन बोलाइँदै एवं पुकारिँदैछ । यसैप्रकार यी अनुयायी पनि बहिरा छन् कि सत्यको आवाज सुन्दैनन्, लाटा छन् कि सत्य कुरा मुखबाट निकाल्दैनन्, अन्धा छन् कि सत्य देख्न सक्दैनन् र बुद्धिहीन छन् कि सत्यको आमन्त्रण र एकेश्वरवाद तथा सुन्नतको आमन्त्रणलाई बुझ्ने योग्य छैनन् । यहाँ 'दुआ़' बाट निकटको आवाज र 'निदाआ' बाट टाढाको आवाजको अर्थ हो ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ كُلُوا۟ مِن طَيِّبَٰتِ مَا رَزَقْنَٰكُمْ وَٱشْكُرُوا۟ لِلَّهِ إِن كُنتُمْ إِيَّاهُ تَعْبُدُونَ ﴿١٧٢﴾

(१७२) हे ईमानवालाहरू ! जुन (पवित्र) कुराहरू हामीले तिमीलाई प्रदान गरेका छौं, तिनलाई खाउ-पिउ र अल्लाह (तआला) प्रति कृतज्ञ रह, यदि तिमी मात्र उसैको आराधना गर्दछौ ।[1]

إِنَّمَا حَرَّمَ عَلَيْكُمُ ٱلْمَيْتَةَ وَٱلدَّمَ وَلَحْمَ ٱلْخِنزِيرِ وَمَآ أُهِلَّ بِهِۦ لِغَيْرِ ٱللَّهِ ۖ فَمَنِ ٱضْطُرَّ غَيْرَ بَاغٍ

(१७३) तिमीलाई मृत एवं रगत (बगिसकेको), सुँगुरको मासु र त्यो प्रत्येक पदार्थ जसमा अल्लाहको नामको अतिरिक्त अरुहरूको नाम पुकारिन्छन्, निषेध छन् ।[2] तर जा

[1]यसमा ईमानवालाहरूलाई ती सबै पदार्थहरु खानको आदेश छ, जसलाई अल्लाहले हलाल (वैध) गर्नुभएको छ र त्यसमा अल्लाहप्रति कृतज्ञ हुने कुरो भनिएको छ । त्यसबाट त एउटा कुरो यो ज्ञात भयो कि अल्लाहले वैध गरिएका कुरा नै शुद्ध एवं पवित्र छन् । निषेध गरिएको वस्तु पवित्र छैनन् चाहे ती इन्द्रियहरूलाई जतिसुकै राम्रो किन नलागुन् (जस्तै पाश्चात्य देशहरूलाई सुगुंरको मासु अधिकतर रुचिकर छ । दोस्रो यो कि मूर्तिहरुको नाममा समर्पित पशु एवं कुराहरू मूर्तिपूजक आफ्ना निम्ति वर्जित गर्थे (जसको विवरण सूर: अनआममा छ) मूर्तिपूजकहरूको यो कर्म गलत छ र यसप्रकार एउटा उचित कुरो वर्जित हुँदैन, तिमीले उनीहरूजस्तै वर्जित नगर (निषेध मात्र त्यही हो, जसको विवरण आगामी आयतमा छ) तेस्रो यो कि यदि तिमी मात्र अल्लाहको आराधना गर्नेवाला हौ भने, कृतज्ञतातिर ध्यान देउ ।

[2]यस आयतमा चार निषेधित पदार्थहरूको वर्णन छ, तर यसलाई संक्षिप्त वाक्य إِنَّمَا सित वर्णन गरिएको छ, जसबाट मस्तिष्कमा भ्रम उत्पन्न हुन्छ कि शायद वर्जित मात्र चार यी कुराहरू हुन्, जबकि यिनका अतिरिक्त पनि वर्जित कैयन् पदार्थ छन् । यसकारण प्रथम त यो बुझिहाल्नु पर्छ कि यो संक्षेप एक विशेष विषयमा आएको छ अर्थात मूर्तिपूजकहरूको यस कर्मको सम्बन्धमा कि उनीहरू वैध पशुहरूलाई पनि अवैध गरिहाल्दथे । अल्लाह (तआला) ले भन्नुभयो ती अवैध होइनन्, निषेध त मात्र यी हुन् । यसकारण यस संक्षिप्तलाई बढाइएको छ अर्थात यसका अतिरिक्त पनि अन्य वर्जित छन् जो यहाँ वर्णित छैनन् । दोस्रो हदीसमा दुई नियम छन्, जुन पशुहरूको हलाल एवं हरामका लागि वर्णित गरिएका छन् । त्यो आयतको सहीह तफ़सीर (भाष्य) को रुपमा सामुन्ने रहनुपर्छ, हिंसक पशुहरूमा ذو ناب (ती नरभक्षी पशु जो कुचलिहरूबाट शिकार गर्दछन्) र पंक्षीहरुमा ذو مخلب (जो पन्जाले शिकार गर्दछन्) वर्जित छन् । तेस्रो कुरा जुन पशुहरूको वर्णन हदीसबाट सिद्ध छ, उदाहरणको लागि गधा, कुकुर आदि पनि निषेध छन्, जसबाट यस कुराको संकेत पाईन्छ कि हदीस पनि कुरआन करीमको जस्तै धर्मको स्रोत हो र धर्मको लागि प्रमाण हो र धर्म दुवैलाई मान्नुबाट

पूर्ण हुन्छ, न कि हदीसलाई छाडेर मात्र कुरआनबाट । मृतबाट तात्पर्य हरेक प्रकारका ती उचित पशुपंक्षी हुन् जो धर्मविधि विना वध गरिएका हुन्छन्, आफ्नो मृत्यु अथवा कुनै दुर्घटनाबाट (जसको विस्तृत जानकारी अल-मायद:मा छ, ।) मरेको होस् । अथवा धार्मिक नियमहरूको विरुद्ध उसलाई वध गरिएको होस्, उदाहरणको लागि घाँटी अँठ्याइएको होस् अथवा पत्थर वा काठबाट मारिएको होस् अथवा जुन प्रकारले आजकल मेशिनले वध गरिन्छ, जसमा झट्काले मारिन्छ, तर हदीसमा दुई प्रकारका मृत जनावर उचित गरिएका छन्, एउटा माछा अर्को टिड्डी (सलह), त्यो यस नियम मृतबाट अलग छन । रक्तबाट तात्पर्य वधको समय बग्नेवाला रगत हो । मासुको साथमा जो रगत रहिरन्छ, त्यो वैध छ । यहाँ पनि दुई रगत हदीसका अनुसार वैध छ । कलेजो र तिल्ली । सुंगुरको मासुलाई अल्लाहले अवैध गरेको छ । सुंगुर निर्लज्जतामा सांह्रै नराम्रो पशु हो । وما أهل त्यो जनावर तथा कुनै अन्य वस्तु जसलाई अल्लाहको अतिरिक्त अन्यको नाममा पुकारिन्छ । यसको तात्पर्य त्यो जनावर हो जसको वध अल्लाहको अतिरिक्त कुनै अन्यको नाममा गरिन्छ । जस्तो अरबका मूर्तिपूजक 'लात' तथा 'उज्जा' आदिको नाममा चढाउँदथे, अथवा आगोको नाममा, जस्तो अग्निपूजक गर्दछन् । र त्यसैमा त्यो जनावर पनि आइहाल्यो, जुन अज्ञान मुसलमान मरेर गएका धर्मात्माहरूको सम्मान, प्रेम उनको प्रशंसापात्र तथा निकटता प्राप्त गर्नको लागि अथवा उनीसंग तर्सदै र आशा गर्दै कबरहरु एवं आस्तानाहरूमा चढाउँछन्, अथवा मुजाविरहरूलाई बुजुर्गहरूको नाममा दिएर आउँछन्, (जस्तै कैयन् बुजुर्गहरूका चिहानमाथि बोर्ड लागेका छन् उदाहरणको लागि 'दाता' साहबको नियाज़को लागि खसीहरू यहाँ बुझाइयून्) यी जनावरहरू चाहे काट्ने बेलामा अल्लाहकै नाम किन नलिइयोस्, निषेध नै हुनेछन् । किनभने यसको ध्येय अल्लाहलाई खुशी पार्नु होइन, चिहानवालाहरूलाई खुशी पार्नको लागि, र अल्लाहका अतिरिक्त अन्यलाई सम्मान गर्नु अथवा अल्लाहका अतिरिक्त अन्यको भय छ, जुनकि शिर्क हो । यसप्रकारले जनावरहरूका अतिरिक्त जुन कुरा पनि नजर-नियाज़ (भाकल) र चढाउनलाई अल्लाहका अतिरिक्त अन्यको नाममा वर्जित हुनेछ, जस्तै चिहानहरूको पासमा लगि अथवा त्यहाँबाट खरीद गरी, कबरहरुको आसपास भिक्षुकहरू एवं निर्धनहरूलाई डेगहरू (कडाही) अथवा मिठाई र पैसा आदिको विवरण र त्यहाँको कोपमा नज़र-नियाज (भाकल) गरेका पैसा हाल्नु, अथवा उर्सको अवसरमा त्यहाँ दूध पुऱ्याउनु यी सबै कार्य वर्जित तथा अनुचित छन्, किनभने यी सबै अल्लाहका अतिरिक्त अन्यलाई नज़र-नियाज गरेका परिस्थितिहरू हुन् । र नजर पनि नमाज़, रोजा आदि पनि इबादत (अर्चना) को जस्तै, एउटा इबादत हो र इबादत (वन्दना) को हरप्रकार एक अल्लाहसित सम्बन्धित छ । यसैले हदीसमा छ ملعون من ذبح لغير الله (सहीह अल-जामेअ अस्सगीर व ज्यादतु, अलबानी भाग २, पृष्ठ १०२४) जसले अल्लाको अतिरिक्तको नाममा जनावर काट्यो, त्यो मलऊन (तिरस्कृत) छ । तफ़सीर अज़ीज़ीमा निशापुरीको तफ़सीरबाट उद्धृत छ ।

وَّلَا عَادٍ فَلَآ اِثْمَ عَلَيْهِ ؕ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ۝

विवश हुन्छ र त्यो सीमा उल्लघंनकारी र अत्याचारी छैन, त्यसलाई ती खानुमा कुनै पाप छैन । अल्लाह (तआला) क्षमाशील, कृपाशील छ ।

اِنَّ الَّذِيْنَ يَكْتُمُوْنَ مَآ اَنْزَلَ اللّٰهُ مِنَ الْكِتٰبِ وَيَشْتَرُوْنَ بِهٖ ثَمَنًا قَلِيْلًا ۙ اُولٰٓئِكَ مَا يَاْكُلُوْنَ فِيْ بُطُوْنِهِمْ اِلَّا النَّارَ وَلَا يُكَلِّمُهُمُ اللّٰهُ يَوْمَ الْقِيٰمَةِ وَلَا يُزَكِّيْهِمْ ۖۚ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ۝

(१७४) निःसन्देह जुन मानिसहरू अल्लाह तआलाद्वारा उतारिएको किताव लुकाउँछन्, र त्यसलाई अलि-अलि (निकृष्ट) मूल्यमा बेच्छन्, विश्वास गर, उनीहरू आफ्ना पेटमा आगो भरिराखेका छन्, केयामतका दिन अल्लाह तआला उनीसित कुरा पनि गर्ने छैन, न उनीहरूलाई पवित्र गर्नेछ, उनीहरूका लागि कठोर यातनाहरू छन् ।

اُولٰٓئِكَ الَّذِيْنَ اشْتَرَوُا الضَّلٰلَةَ بِالْهُدٰى وَالْعَذَابَ بِالْمَغْفِرَةِ ۚ فَمَآ اَصْبَرَهُمْ عَلَى النَّارِ ۝

(१७५) यी नै ती मानिसहरू हुन् जसले कुमार्गलाई संमार्गको सट्टा र यातनालाई क्षमाको साटो किनेका छन् । यिनीहरू आगोको यातना कति सहन गर्नेवाला छन् ।

ذٰلِكَ بِاَنَّ اللّٰهَ نَزَّلَ الْكِتٰبَ بِالْحَقِّ ؕ وَاِنَّ الَّذِيْنَ اخْتَلَفُوْا فِي الْكِتٰبِ لَفِيْ شِقَاقٍۭ بَعِيْدٍ ۝

(१७६) यी यातनाहरूको कारण यही हो कि अल्लाह तआलाले सत्य किताब अवतरित गऱ्यो, तर जसले यस किताबको कुरामा विभेद गरे, उनीहरू हठ र विरोधमा निकै टाढा पुग्न गए ।

---

أجمع العلماء أن مسلما ذبح ذبيحة يريد بذبحها التقرب إلى غير الله صار مرتدا و ذبيحته ذبيحة مرتد

(तफ़सीर अज़ीजा पृष्ठ ६११, अशरफुल हवाशीवाट उद्धृत) आलिमहरू यस कुरामा सहमत छन् कि यदि मुसलमानले कुनै जनावर अल्लाहको अतिरिक्त कुनै अन्यको निकटता प्राप्त गर्ने उद्देश्यले काट्यो भने त्यो मुर्तद (इस्लामवाट खारिज) हुनेछ र त्यसको वध एउटा मुर्तदको वध हुनेछ ।

لَيْسَ الْبِرَّ أَنْ تُوَلُّوا وُجُوهَكُمْ قِبَلَ الْمَشْرِقِ وَالْمَغْرِبِ وَلَٰكِنَّ الْبِرَّ مَنْ آمَنَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَالْمَلَائِكَةِ وَالْكِتَابِ وَالنَّبِيِّينَ وَآتَى الْمَالَ عَلَىٰ حُبِّهِ ذَوِي الْقُرْبَىٰ وَالْيَتَامَىٰ وَالْمَسَاكِينَ وَابْنَ السَّبِيلِ وَالسَّائِلِينَ وَفِي الرِّقَابِ وَأَقَامَ الصَّلَاةَ وَآتَى الزَّكَاةَ وَالْمُوفُونَ بِعَهْدِهِمْ إِذَا عَاهَدُوا وَالصَّابِرِينَ فِي الْبَأْسَاءِ وَالضَّرَّاءِ

(१७७) सम्पूर्ण पुण्यकार्य पूर्व र पश्चिमतिर मुख फर्काउनुमा मात्र होइन[1] वरु वास्तवामा राम्रो त्यो व्यक्ति हो जो अल्लाह (तआला) मा, क़्यामतको दिनमा, फरिश्ताहरूमा अल्लाहको कितावमा, एवं नवीहरूमा ईमान राख्नेवाला छ, जो धनसित प्रेम गरेपनि सम्वन्धिहरू, अनाथहरू, यात्रीहरू एवं भिक्षुकहरूलाई दिन्छ, दासहरूलाई मुक्त गर्दछ, नमाज़को नियमितता स्थापित गर्दछ र ज़कात दिन्छ, जब वचन दिन्छ त त्यसलाई पूरा गर्दछ, धनको कमी, दुख-दर्द र लडाईको समय धैय

[1]यो आयत क़िब्लाको विषयमा नै अवतरित भएको छ। एक त यहूदी आफ्ना क़िब्लालाई (जुन वैतुल मक़दिसको पश्चिम भागतिर छ) र इसाई आफ्ना क़िब्लालाई (जुन वैतुल मक़दिसको पूर्वी भागतिर छ) वडो महत्व दिइराखेका थिए र त्यसमाथि गौरव गरिराखेका थिए। अर्कोतिर मुसलमानहरूको क़िब्लाको दिशा परिवर्तित भएकोमा आपत्ति गरिराखेका थिए, जसवाट केही मुसलमान पनि दुखी हुन्थे। अल्लाह तआलाले आदेश गऱ्यो पूर्व अथवा पश्चिम दिशामा मुख फकाउनु स्वयं कुनै सत्कर्म होइन, वरु यो त केन्द्रीयकरण एवं सामूहिकतालाई प्रदर्शित गर्ने कुरोको एउटा विधि हो, शुद्ध सत्कर्म त यी विश्वासहरूमा ईमान राख्नु हो, जुन अल्लाहले वर्णन गर्नुभएको छ र ती कर्महरू एवं चरित्रलाई अपनाउनु हो, जसमाथि विशेष वल दिइएको छ। यसको अगाडी ती विश्वासहरू एवं कर्महरूको वर्णन छ। अल्लाहमा विश्वास यो हो कि त्यो आफ्नो जात एवं विशेषताहरूमा एक छ, सबै नराम्रा कुर ाहरूवाट शुद्ध एवं टाढा छ तथा कुरआन तथा हदीसमा वर्णित यसका सम्पूर्ण विशेपताहरूलाई विना कुनै तर्क-वितर्क अथवा प्रश्न गरी स्वीकार गरियोस्। आख़िर तको फल प्राप्तिको दिन हुने प्रलय, स्वर्ग-नरकमा विश्वास राख्नू। अल-कितावको अर्थ आकाशवाट अवतरित भएको सवै कितावहरूको सत्यतामाथिको ईमान हो। एवं फरिश्ताहरूको अस्तित्व एवं सवै पैग़म्वरहरूमा विश्वास गरियोस्। यी ईमानहरूका साथ ती कर्महरूका अनुसार कर्म गरियोस् जसको विस्तृत विवरण यस आयतमा छ। على حبه मा ه को केन्द्रिता धनतिर छ। अर्थात धनको लोभ हुँदा-हुँदै पनि धन अल्लाहको नाममा खर्च गरोस्। البأساء सित धनको कमी, अति निर्धनता الضراء वाट हानि अथवा रोग तथा البأساء वाट लडाई र त्यसको अधिकताको तात्पर्य हो। यी तिनै परिस्थितिहरूमा धैर्य राख्नु अर्थात अल्लाहका आदेशहरूवाट मुख नफर्काउनु अति कठिन कार्य हो, यसकारण यी परिस्थितिहरूलाई विशेपरुपले वर्णन गरिएको छ।

وَحِينَ الْبَأْسِ ۗ أُولَٰئِكَ الَّذِينَ صَدَقُوا ۖ وَأُولَٰئِكَ هُمُ الْمُتَّقُونَ ﴿١٧٧﴾

राख्दछ, यी नै सत्यवादी मानिसहरू हुन् र यी नै परहेजगार (नराम्रो कुरावाट पन्छिनेवाला) हुन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا كُتِبَ عَلَيْكُمُ الْقِصَاصُ فِي الْقَتْلَى ۖ الْحُرُّ بِالْحُرِّ وَالْعَبْدُ بِالْعَبْدِ وَالْأُنثَىٰ بِالْأُنثَىٰ ۚ فَمَنْ عُفِيَ لَهُ مِنْ أَخِيهِ شَيْءٌ فَاتِّبَاعٌ بِالْمَعْرُوفِ وَأَدَاءٌ إِلَيْهِ بِإِحْسَانٍ ۗ ذَٰلِكَ تَخْفِيفٌ

(१७८) हे ईमानवालाहरू ! तिमीलाई हत्या गरिएको व्यक्तिको वदला लिनु फर्ज (अनिवार्य) गरिएको छ, आजाद, आजादको साटो, दास, दासको साटो, नारी नारीको साटो,[1] हो यदि जो कोहीलाई त्यसको भाइको तर्फवाट क्षमा प्रदान गरिन्छ, त्यसले भलाईको सम्मान गर्नुपर्छ ।

[1]अन्धकार कालमा कुनै नियम अथवा विधि त थिएन, यसैकाण शक्तिशाली समुदायका मानिसहरू, शक्तिहीन समुदायमाथि जस्तो प्रकारले अत्याचार गर्न चाहन्थे, गर्दथे । अत्याचार गर्नुको एउटा विधि यो थियो कि कुनै शक्तिशाली समुदायको पुरुषको हत्या हुन्थ्यो भने, त्यो मात्र हत्यारालाई वध गर्नुको सट्टा हत्याराको पूरा समुदायका कैयन् मानिसहरूको हत्या गर्दथ्ये । वरु कहिलेकाहीं सम्पूर्ण समुदायलाई नष्ट गर्ने प्रयत्न गर्दथ्ये । र स्त्रीको साटो पुरुषलाई र वन्दीहरूको साटो स्वतन्त्र पुरुषको हत्या गर्दथ्यो । अल्लाह तआलाले यस अन्तर एवं विशेषतालाई समाप्त गर्दै आदेश गर्नुभयो कि जसको हत्या हुनेछ, वदलामा त्यसैको समान वध गरिनेछ । हत्यारा स्वतन्त्र छ भने त वदलामा त्यही स्वतन्त्र पुरुष, वन्दी छ भने वदलामा त्यही वन्दी तथा स्त्री छ भने वदलामा त्यसै स्त्रीलाई वध गरिनेछ न कि वन्दीको स्थानमा स्वतन्त्र, स्त्रीको स्थानमा पुरुष अथवा पुरुषको स्थानमा कुनै पुरुषलाई वध गरिनेछ । यसको अर्थ यो कदापि होइन कि यदि पुरुषले कुनै स्त्रीको हत्या गरेको छ भने कुनै स्त्रीलाई हत्या गरियोस् अथवा स्त्रीले पुरुषलाई हत्या गर्छ भने कुनै पुरुषको हत्या गरियोस् (जस्तो कि स्पष्ट रुपमा भावार्थ निस्कन्छ), वरु यी शब्द अवतरणका विशेषता हुन् जसवाट यो स्पष्ट हुनजान्छ कि जुन हत्याराले हत्या गरेको छ, उसैलाई वध गरिनेछ, चाहे त्यो पुरुष होस् अथवा स्त्री, शक्तिशाली होस् या निर्वल الْمُسْلِمُونَ تَتَكَافَأُ دِمَاؤُهُمْ (अल-हदीस, अवू-दाऊद, किताबुल जिहाद) "सवै मुसलमानहरूको रगत (पुरुष होउन अथवा स्त्री) समान छ ।" अर्थात् आयतको भावर्थ त्यही हो, जुन कुरआन करीमको दोस्रो आयत النَّفْسَ بِالنَّفْسِ (अल-मायेदा-४५) को छ । हनफी आलिमहरूले यसवाट तर्क निकाल्दै भनेका छन् कि मुसलमानलाई काफिरको साटो वध गरिने छ तर अधिकतर आलिमहरू (धार्मिक विद्वानहरु)लाई यसवाट मतभेद छ किनभने हदीसमा स्पष्ट छ لَا يُقْتَلُ مُسْلِمٌ بِكَافِرٍ (सहीह वुखारी, संख्या ६९१५, तथा अस्सुनन) "मुसलमानलाई काफिरको साटो वध गरिने छैन ।" (फतहुल कदीर)

مِّن رَّبِّكُمْ وَرَحْمَةٌ ۗ فَمَنِ اعْتَدَىٰ بَعْدَ ذَٰلِكَ فَلَهُ عَذَابٌ أَلِيمٌ ﴿١٧٨﴾

र सजिलोसंग दीयत (धन जुन हत्याको साटो लिईन्छ, अर्थदण्ड) तिर्नु पर्छ ।[1] तिम्रो प्रभुको तर्फबाट यो छुट र कृपा हो ।[2] यस पश्चात पनि जो उल्लघंन गर्दछ, त्यसले अति यातनाको सामना गर्नुपर्ने छ ।[3]

وَلَكُمْ فِي الْقِصَاصِ حَيَاةٌ يَا أُولِي الْأَلْبَابِ لَعَلَّكُمْ تَتَّقُونَ ﴿١٧٩﴾

(१७९) बुद्धिमानहरू ! किसास (प्रतिहत्या, हत्यादण्ड) मा तिम्रो निम्ति जीवन छ। यसकारण तिमी (हत्या गर्नबाट) रोकिनेछौ ।[4]

[1]क्षमाका दुई स्थितिहरू छन्, एक त बिना कुनै धन साटोमा लिएर अर्थात देयत लिए बिना नै मात्र अल्लाहको प्रशंसापात्र बन्नुको लागि क्षमा गर्नु, दोस्रो स्थिति वधको साटो देयत स्वीकार गरिहाल्नु । यदि यो दास्रो परिस्थिति अपनाइन्छ भने भनिन्छ कि देयत लिनेवाला भलाईको पालना गरोस् । ﴿ وَأَدَاءٌ إِلَيْهِ بِإِحْسَانٍ ﴾ मा हत्यारासित भनिदैछ कि बिना कुनै कष्ट दिइकन राम्रो प्रकारले देयतलाई बुझाओस् । हत्या भएको व्यक्तिको निकटका सम्बन्धिहरूले त्यसमाथि कृपा गरेको छ, त्यसको साटोमा कृतज्ञतासँग नै देओस् । ﴿ هَلْ جَزَاءُ الْإِحْسَانِ إِلَّا الْإِحْسَانُ ﴾ (अर्रहमान)

[2]यो छूट र दया (अर्थात् बदला, क्षमा अथवा देयत तीनवटै परिस्थितिहरू) अल्लाह तआलाको तर्फबाट तिम्रा लागि भएका छन्, नत्र यसभन्दा पहिला तौरातवालाहरूका लागि बदला अथवा क्षमा थियो, तर दीयत थिएन तथा इंजीलवालाहरू (इसाईहरू) मा मात्र क्षमा नै थियो, बदला थियो न देयत (इब्ने कसीर)

[3]देयत, (धन जुन मृतकका उत्तराधिकारीहरू हत्याराबाट हत्याको साटोमा मृत्युदण्ड क्षमा गर्नको लागि माँगदछ) स्वीकारिने अथवा लिइहाले पश्चात पनि त्यसको हत्या गर्दछ, भने यो अत्याचारको अधिकता हो, जसको दण्ड त्यसले संसार र परलोक दुवैमा भोग्नु पर्नेछ ।

[4]जब हत्यारालाई यो भय हुनेछ कि हत्याको बदलामा उसलाई पनि मारिने छ भने त्यसले पनि कसैलाई हत्या गर्ने साहस गर्नेछैन । र जुन समाजमा हत्याको बदलामा यो नियम लागू हुन्छ, त्यहाँ यो भय समाजलाई हत्या र रक्तपातबाट सुरक्षित राख्दछ, जसले समाजमा अत्यन्त सुख-शान्ति रहन्छ । यसको अवलोकन सऊदी अरबको समाजमा गर्न सकिनेछ, जहाँ इस्लामी नियमहरूको पालनाको कारणले अल्लाहको कृपाले सुख-शान्तिको वातावरण छ ।

كُتِبَ عَلَيْكُمْ إِذَا حَضَرَ أَحَدَكُمُ الْمَوْتُ إِن تَرَكَ خَيْرًا الْوَصِيَّةُ لِلْوَالِدَيْنِ وَالْأَقْرَبِينَ بِالْمَعْرُوفِ ۖ حَقًّا عَلَى الْمُتَّقِينَ ﴿١٨٠﴾

(१८०) तिमीलाई अनिवार्य गरिएको छ कि जब तिमीहरूमध्ये कोही मृत्यु अवस्थामा आई पुग्दछ र केही सम्पत्ति छाड्छ, भने आफ्नो माता-पिता र सम्वन्धिहरूका लागि भलाईको उत्तरदान (इच्छा पत्र) गरोस् ।[1] सदाचारीहरूका लागि यो अनिवार्य कर्तव्य स्पष्ट छ ।

فَمَن بَدَّلَهُ بَعْدَمَا سَمِعَهُ فَإِنَّمَا إِثْمُهُ عَلَى الَّذِينَ يُبَدِّلُونَهُ ۚ إِنَّ اللَّهَ سَمِيعٌ عَلِيمٌ ﴿١٨١﴾

(१८१) अब जो व्यक्ति त्यसलाई सुने पश्चात वद्लन्छ, भने त्यसको पाप बदल्ने व्यक्तिमाथि नै हुनेछ । नि:सन्देह अल्लाह तआला सर्वश्रोता एवं सर्वज्ञाता छ ।

فَمَنْ خَافَ مِن مُّوصٍ جَنَفًا أَوْ إِثْمًا فَأَصْلَحَ بَيْنَهُمْ فَلَا إِثْمَ عَلَيْهِ ۚ إِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿١٨٢﴾

(१८२) हो जो उत्तरदान कर्ताको पक्षपात तथा पापसित तर्सन्छ,[2] र यदि त्यो तिनीहरूमा परस्पर सुधार गराईदिन्छ भने त्यसमाथि पाप छैन, अल्लाह (तआला) अत्यन्त क्षमाशील अत्यन्त दयालु छ ।

[1]वसीयत गर्नुको यो आदेश उत्तराधिकारीको आयत उतर्नुभन्दा पहिला दिइएको थियो । अब यो निलम्वित छ । नवी सल्लल्लाहु अलैहि वसल्लमको भनाई छ : إِنَّ اللهَ قَدْ أَعْطَى كُلَّ ذِي حَقٍّ حَقَّهُ، فَلَا وَصِيَّةَ لِوَارِثٍ (उद्धृत अस्सुनन–इव्ने कसीरवाट लिखित) अल्लाह तआलाले प्रत्येक अधिकारीलाई त्यसको अधिकार दिइएको छ (अर्थात् उत्तराधिकारीको भाग निर्धारित गरिदिइएका छन्) अब कुनै उत्तराधिकारीलाई वसीयत गर्नु उचित छैन । हो अब यस्ता सम्वन्धिहरूका लागि वसीयत गर्न सकिन्छ, जो उत्तराधिकारी होइनन् अथवा भलाईको मार्गमा खर्च गर्नको लागि पनि गर्न सकिन्छ, र त्यसको अधिकभन्दा अधिक भाग एक तिहाई माल सम्पत्ति छ, त्यसभन्दा अधिक वसीयत गर्न सकिदैन । (सहीह बुखारी, किताबुल फ़राइद)

[2] جنفًا (आकृष्ट हुनु) को अर्थ हो कि गल्ती अथवा भूलले कुनै एक सम्वन्धितिर अधिक आकृष्ट भई अरुको अधिकार मार्नु, إثمًا को तात्पर्य हो कि जानी-जानी यस्तो गरियोस् (ऐसरुत्तफ़ासीर) अथवा إثمًا को तात्पर्य पापको वसीयत हो, जसलाई बदल्नु र त्यस्तो नगर्नु आवश्यक छ । यसको अर्थ छ वसीयतमा न्याय हुनु आवश्यक छ, अन्यथा जो संसारवाट जाँदा-जाँदै अत्याचारी वन्यो, उसलाई परलोकमा वच्न सक्ने आशा कम छ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ كُتِبَ عَلَيْكُمُ ٱلصِّيَامُ كَمَا كُتِبَ عَلَى ٱلَّذِينَ مِن قَبْلِكُمْ لَعَلَّكُمْ تَتَّقُونَ ﴿١٨٣﴾

(१८३) हे निष्ठावानहरू ! तिमीमाथि रोज़ाहरू (ब्रत जु.न रमजा़नको महिनामा बसिन्छ) अनिवार्य गरिए, जुनप्रकारले तिमीभन्दा पहिलाका मानिसहरूलाई अनिवार्य गरिएका थिए, ताकि तिमी तक़्वा (अल्लाहसित भय) को मार्ग अपनाउ ।[1]

أَيَّامًا مَّعْدُودَٰتٍ ۚ فَمَن كَانَ مِنكُم مَّرِيضًا أَوْ عَلَىٰ سَفَرٍ فَعِدَّةٌ مِّنْ أَيَّامٍ أُخَرَ ۚ وَعَلَى ٱلَّذِينَ يُطِيقُونَهُۥ فِدْيَةٌ طَعَامُ مِسْكِينٍ ۖ فَمَن تَطَوَّعَ خَيْرًا فَهُوَ خَيْرٌ لَّهُۥ ۚ وَأَن تَصُومُوا۟

(१८४) गणनामा केही दिन मात्र छन्, तर यदि तिमीहरूमध्ये जो व्यक्ति बिरामी हुन्छ अथवा यात्रामा हुन्छ, त त्यसले अन्य दिनहरूमा गणना पूरा गरोस् ।[2] र जो यसको सामर्थ्य राख्दछ, फ़िदया (सट्टा) मा एउटा निर्धनलाई भोजन गराओस्[3] अनि जो व्यक्ति सत्कर्ममा अगाडी बढ्दछ त्यो

[1]صيام– صوم (रोजा़, ब्रत) उद्‌गम हो जसको इस्लामी धार्मिक नियमहरू अनुसार अर्थ छ : प्रात: सूर्य उदाउनुभन्दा पहिला रात्रिको अन्धकारपछि जुन सेतो प्रकाश वातावरणमा हुन्छ, को समयदेखि लिएर सूर्यास्तसम्म खानु-पिउनु, पत्नीसित सम्भोग गर्नु र ब्रत भंग गर्ने प्रत्येक प्रकारका क्रियाकलापबाट अल्लाहको प्रसन्नता प्राप्त गर्नको निम्ति रोकिरहनु, यो इबादत इन्द्रियहरुको पवित्रता एवं शुद्धताको लागि अति विशेष छ, यसकारण यसलाई तिमीभन्दा पहिलाका समुदायहरूमाथि पनि अनिवार्य गरिएको थियो । यसको सबभन्दा ठूलो तात्पर्य अल्लाह तआलाको भय हृदयमा उत्पन्न गर्नु हो । र हृदयदेखि अल्लाहको भय मनुष्यका चरित्र र कर्महरूलाई सुधार्नमा मूल भूमिका उत्पन्न गर्दछ ।

[2]यो रोगी र यात्रीलाई छूट दिइएको छ कि त्यो रोग अथवा यात्राको कारण रमजा़नको महिनाको जति रोजा़ बस्न सकेको छैन, त्यो पछि राखेर गणना पूरा गरोस् ।

[3]يطيقونه को एउटा अनुवाद يتجشمونه अति कठिनताले रोजा़ बस्न सकोस्, गरिएको छ (यो आदरणीय इब्ने अब्बासबाट उद्धृत छ, इमाम बुख़ारीले पनि यसलाई रुचाउनु भएको छ) अर्थात जो अति वृद्ध अवस्थामा एवं यस्ता रोगका कारणले, जसको उपचारबाट स्वास्थ्यको आशा नहोस्, रोजा़ बस्नमा कठिनाई अनुभव गर्छ, त्यसले एउटा निर्धनलाई भोजन फ़िदया (प्रतिशोध) रूपमा देओस्, परन्तु अधिकतर टीकाकार ले यसको अनुवाद "शक्ति" राख्दछन् । नै गरेका छन्, जसको अर्थ छ इस्लामको प्रारम्भिक कालमा रोजा़को बानी नभएको कारण शक्ति राख्नेवालालाई पनि छुट दिइएको थियो कि यदि त्यो रोजा़ बस्दैन भने सट्टामा एउटा निर्धनलाई परन्तु पछि ﴿فَمَن شَهِدَ مِنكُمُ ٱلشَّهْرَ فَلْيَصُمْهُ﴾ द्वारा यसलाई निरन्तर गरी प्रत्येक शक्ति राख्नेवालाको लागि रोजा़ अनिवार्य गरियो, परन्तु अति वृद्ध एवं सधैं बिरामीको लागि अब

خَيْرٌ لَّكُمْ إِن كُنتُمْ تَعْلَمُونَ ﴿١٨٤﴾

त्यसैको लागि श्रेष्ठ छ।[1] तर तिम्रो पक्षमा उचित कर्म रोजा (व्रत) बस्नु नै हो, यदि तिमी अवगत छौ।

شَهْرُ رَمَضَانَ الَّذِي أُنزِلَ فِيهِ الْقُرْآنُ هُدًى لِّلنَّاسِ وَبَيِّنَاتٍ

(१८५) रमजानको महिना त्यो हो, जसमा कुरआन उतारियो [२] जुन मानिसहरूको

यही आदेश छ कि त्यसले फ़िदया देओस् र حاملة (गर्भवती) र مرضعة (दूध खुवाउने) स्त्रीहरू यदि कठिनाईको आभास गर्छन् भने उनी पनि रोगीकै आदेशमा पर्नेछन् अर्थात् उनीहरू व्रत नबसून् र पछि छुटेका रोज़ाहरू बसून्। (तोहफ़तुल अहवजी सरह तिर्मिजी)

[1]जो आफूखुशीले एक निर्धनका अतिरिक्त दुई अथवा तीनलाई भोजन गराउँछ भने उसको लागि अधिक श्रेयष्कर छ।

[२]रमजानमा कुरआन उतार्नुको अर्थ यो होइन कि सम्पूर्ण कुरआन कुनै एक रमज़ानमा अवतरित भयो, बरु यो हो कि रमजानको शबे कद्र (आदरवाली रात्रि) मा लौह महफूज (अल्लाहको त्यो किताव जसमा आदिदेखि अन्तसम्म सबैकुरा लेखिएको छ) बाट संसारको आकाशमा उतारियो र त्यहाँ बैतुल इज्जत (आदरवाला घर) मा राखियो। त्यहाँबाट परिस्थितिका अनुसार लगभग २३ वर्षसम्म अवतरित हुँदैगयो। (इब्ने कसीर) यसकारण यो भन्नु कि कुरआन रमजानमा अथवा लैलतुल क़द्र अथवा लैलतुल मुबारकमा उत्र्यो, यो सबै सत्य छ, किनभने लौहे महफूज़बाट त रमजानमा नै उत्रेको छ र लैलतुल क़द्र एवं लैलतुल मुबारक एउटै रात हो अर्थात् शुभरात्रि जुन रमजानमा नै आउँछ। केही विद्वानहरूका निकट यसको तात्पर्य यो हो कि कुरआनको अवतरण रमजानको महिनामा भयो र पहिलो (ईशवाणी) जो हिराको गुफा (जो मक्काको नूर पर्वतमा छ) मा रमजानको महिनामा आयो। यस आधारमा कुरआन मजीद र रमज़ानुल मुबारकको आपसमा घनिष्ट सम्बन्ध छ। यसैकारण नबी करीम सल्लल्लाहु अलैहि वसल्लम यस पवित्र महिनामा आदरणीय जिब्रीलबाट कुरआन सुन्दथे र सुनाउँदथे र जुन वर्ष उहाँको देहान्त भयो त्यस वर्ष उहाँले र मजानमा दुईपटक जिब्रीलबाट पवित्र कुरआन सुन्ने सुनाउने शुभ कर्म गर्नुभएको थियो। रमजानका तीन रातहरू (२३, २५ र २७) मा उहाँले आफ्ना मित्रहरूका जमातका साथ कियामुल्लैल (रातिको नमाज़को लागि उभिनु) पनि गराउनु भयो, जसलाई अब तरावीह भनिन्छ। (सहीह तिमिजी एवं सहीह इब्ने माजा, अलबानी) यी तरावीह आठ रकात र वितरकका साथ एघार रकात थिए, जसको विवरण जाविर "र ज़िअल्लाह अन्ह" को हदीसमा छ र इमाम मिरवजीले यसलाई कियामुल्लैलमा वर्णन गर्नुभएको छ। र आदरणीय आयशा "रज़ी अल्लाह अन्हा" का कथन (सहीह बुख़ारी) मा उपस्थित छ। नबी सल्लल्लाहु अलैहि वसल्लमबाट २० रकआत तरावीह पढ्नु कुनै पनि सहीह हदीसबाट सिद्ध छैन।

مِّنَ الْهُدٰى وَالْفُرْقَانِ ۚ فَمَنْ شَهِدَ مِنْكُمُ الشَّهْرَ فَلْيَصُمْهُ ۖ وَمَنْ كَانَ مَرِيضًا أَوْ عَلٰى سَفَرٍ فَعِدَّةٌ مِّنْ أَيَّامٍ أُخَرَ ۗ يُرِيدُ اللّٰهُ بِكُمُ الْيُسْرَ وَلَا يُرِيدُ بِكُمُ الْعُسْرَ وَلِتُكْمِلُوا الْعِدَّةَ وَلِتُكَبِّرُوا اللّٰهَ عَلٰى مَا هَدٰىكُمْ وَلَعَلَّكُمْ تَشْكُرُونَ ﴿١٨٥﴾

मार्गदर्शक हो, र जुन मार्गदर्शन एवं सत्य र असत्य मध्य निर्णायक हो, तिमीमध्ये जो पनि यस महिनालाई भेटाउँछ, त्यसले रोजा़ राख्नुपर्छ, हो जो रोगी छ अथवा यात्रामा छ, त त्यसले अरु दिनमा यो गणना पूरा गर्नुपर्छ । अल्लाह (तआ़ला) को इच्छा तिमीसित सरलताको छ, कठोरताको होइन, त्यो चाहन्छ कि तिमी गणना पूरा गर र अल्लाह तआ़लाद्वारा प्रदान गरिएका मार्गदर्शनका अनुसार त्यसको महिमाको वर्णन गर; एवं त्यसप्रति कृतज्ञ रह ।

وَإِذَا سَأَلَكَ عِبَادِي عَنِّي فَإِنِّي قَرِيبٌ ۖ أُجِيبُ دَعْوَةَ الدَّاعِ إِذَا دَعَانِ ۖ فَلْيَسْتَجِيبُوا لِي وَلْيُؤْمِنُوا بِي لَعَلَّهُمْ يَرْشُدُونَ ﴿١٨٦﴾

(१८६) र जब मेरा भक्तहरू मेरो विषयमा प्रश्न गर्छन त भनिदिनुस कि म धेरै निकट छु, हर प्रार्थीको पुकारलाई जहिले पनि त्यो मलाई पुकार्दछ, म स्वीकार गर्दछु ।[1] यसकारण मानिसहरूलाई पनि आवश्यक छ कि उनी मेरा कुरा मानून् र ममा आस्था राखून् यही उनको भलाईको कारण हो ।

[1]रमज़ान मुबारकका नियम एवं आदेशको मध्य दुआ़को नियमको वर्णन गरेर यो स्पष्ट गरिदिइयो कि रमज़ानमा प्रार्थना (दुआ़) को पनि बडो महत्व छ, जसको अत्याधिक प्रयोजन गर्नुपर्छ, विशेषरुपले इफ्तार (जब रोजा़ तोड्ने समय निकट हुन्छ) को समय प्रार्थनालाई स्वीकार हुनको विशेष समय भनिएको छ । (मुसनद अहमद, तिर्मिजी, नसाई, इब्ने माजा र इब्ने क्सीरबाट लिइएको छ) तैपनि प्रार्थना स्वीकार हुनको लागि यो पनि आवश्यक छ कि ती नियमहरू र आदरलाई विचारमा राखियोस् जुन कुरआ़न र हदीसमा वर्णित छ, जसमध्ये दुईटालाई यहाँ वर्णन गरिएको छ । एउटा अल्लाहमा कुन प्रकारले दृढ विश्वास र दोस्रो उसको आदेशको पालना एवं अनुसरण । यसैप्रकारले हदीसमा हराम (अवैध) भोजनबाट बच्न एवं एकाग्र मन एवं चित्त हुने कुरामा पनि जोड दिइएको छ ।

أُحِلَّ لَكُمْ لَيْلَةَ الصِّيَامِ الرَّفَثُ إِلَىٰ نِسَائِكُمْ ۚ هُنَّ لِبَاسٌ لَكُمْ وَأَنْتُمْ لِبَاسٌ لَهُنَّ ۗ عَلِمَ اللَّهُ أَنَّكُمْ كُنْتُمْ تَخْتَانُونَ أَنْفُسَكُمْ فَتَابَ عَلَيْكُمْ وَعَفَا عَنْكُمْ ۖ فَالْآنَ بَاشِرُوهُنَّ وَابْتَغُوا مَا كَتَبَ اللَّهُ لَكُمْ ۚ وَكُلُوا وَاشْرَبُوا حَتَّىٰ يَتَبَيَّنَ لَكُمُ الْخَيْطُ الْأَبْيَضُ مِنَ الْخَيْطِ الْأَسْوَدِ مِنَ الْفَجْرِ ۖ ثُمَّ أَتِمُّوا الصِّيَامَ إِلَى اللَّيْلِ ۚ وَلَا تُبَاشِرُوهُنَّ وَأَنْتُمْ عَاكِفُونَ فِي الْمَسَاجِدِ ۗ تِلْكَ حُدُودُ اللَّهِ فَلَا تَقْرَبُوهَا ۗ

(१८७) रोज़ाका रातहरूमा आफ्ना पत्नीहरूसित सम्पर्क गर्न तिमीलाई अनुमति छ, उनीहरू तिम्रा वस्त्र हुन् र तिमीहरू उनका वस्त्र हौ । तिम्रो उपभोगको ज्ञान अल्लाहलाई छ, उसले तिम्रा पश्चातापलाई स्वीकार गरी तिमीलाई क्षमा गरिदियो, अब तिमीलाई उनीहरूसित संभोगको र अल्लाह (तआला) द्वारा लेखिएको कुरालाई खोज्ने आज्ञा छ, तिमी खाने-पिउने गर, यहाँसम्मकि प्रातः कालको सेतोपनाको धागो अन्धकारको कालो धागोबाट स्पष्ट देखिओस् ।[1] अनि रातसम्म रोज़ालाई पूरा गर ।[2] र स्त्रीहरूसित त्यसबेला संभोग नगर, जबकि तिमी मस्जिदहरुमा ऐतेकाफ़ (एक निश्चित समयको लागि अल्लाहको इबादतको उद्देश्यले

[1]इस्लामको प्रारम्भिक कालमा एउटा आदेश यो थियो कि रोज़ा (व्रत) तोडे पश्चात ईशा (रात्रि) को नमाज़ अथवा नसुतेसम्म खाने-पिउने र पत्नीसित संभोग गर्ने आज्ञा थियो, सुतेपश्चात यिनीमध्ये कुनै कार्य गर्न सकिन्नथ्यो । स्पष्ट छ कि यो निषेधाज्ञा कठिन थियो र यस अनुसार कार्य गर्न कठिन थियो । अल्लाह तआलाले यस आयतमा यी दुबै निषेधाज्ञा निरस्त गरिदियो र ईफ़्तार (रोज़ा तोड्ने समय) देखि लिएर प्रातः काल कालोपना हटुन्जेलसम्म खाने-पिउने तथा पत्नीसँग संभोग गर्ने आज्ञा प्रदान गरिदियो । الرفث को अर्थ हो पत्नीसँग सम्भोग गर्नु । الخيط الأبيض सित अर्थ प्रातः कालीन प्रकाश र الخيط الأسود कालो धागोसित तात्पर्य रात हो । (इब्ने कसीर)

**टिप्पणीः** यसबाट यो पनि विदित भयो कि संभोग गरे पश्चातको स्थितिमा रोज़ा बस्न सकिन्छ, किनभने फज्र (प्रातःकाल) सम्म अल्लाहले उपरोक्त कार्यको आज्ञा प्रदान गरेको छ र सहीह बुख़ारी र मुस्लिमको वर्णनबाट पनि यसको समर्थन हुन्छ ।

[2]अर्थात् रात पर्नासाथ (सूर्यास्तको तुरुन्त पश्चात) रोज़ा तोडिहाल । ढिलो नगर, जस्तो कि हदीसमा पनि रोजा शीघ्र भङ्ग गर्ने– इफ्तार गर्ने कुरोमा जोड दिइएको छ र विशेषता भनिएको छ । दोस्रो यो कि विशालनगर, विसालको अर्थ हो कि एउटा रोजा तोडे बिना अर्को रोजा बस्नु । यसबाट नबी सल्लल्लाहु अलैहि वसल्लमले अति कठोरताकासाथ मनाही गर्नुभएको छ । (विवरणको लागि हदीसका किताबहरू हेर्नुस् ।)

كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ اٰيٰتِهٖ لِلنَّاسِ لَعَلَّهُمْ يَتَّقُوْنَ ﴿١٨٧﴾

आफूलाई मस्जिदमा नै सीमित गर्नु हो ।) मा हुन्छौ ।[1] यी अल्लाह (तआला) का सीमाहरू हुन् । तिमी यिनका नजिक पनि नजाउ । यसैप्रकार अल्लाह तआला आफ्ना निशानीहरू मानिसहरूलाई वर्णित गर्दछ, ताकि उनीहरू बचून् ।

وَلَا تَاْكُلُوْٓا اَمْوَالَكُمْ بَيْنَكُمْ بِالْبَاطِلِ وَتُدْلُوْا بِهَآ اِلَى الْحُكَّامِ لِتَاْكُلُوْا فَرِيْقًا مِّنْ اَمْوَالِ النَّاسِ بِالْاِثْمِ وَاَنْتُمْ تَعْلَمُوْنَ ﴿١٨٨﴾

(१८८) र एक-अर्काको माल अनाधिकारिक रुपले खाने नगर, न अधिकार व्यक्तिहरूलाई घूस पुऱ्याई कसैको केही माल अत्याचारले हडप गर्ने गर । यद्यपि तिमी जान्दछौ ।[2]

يَسْـَٔلُوْنَكَ عَنِ الْاَهِلَّةِ ۭ قُلْ هِيَ مَوَاقِيْتُ لِلنَّاسِ وَالْحَجِّ ۭ

(१८९) मानिसहरू तपाईंसित चन्द्रमाको विषयमा प्रश्न गर्दछन्, तपाई भनिदिनुस् कि यो

---

[1]ऐतेकाफ़ (रमज़ान र अन्य महिनाहरूमा मस्जिदमा इवादतको उद्देश्यले एकान्तमा बस्नु ।) को समयमा पत्नीसँग सम्भोग, चुम्बन एवं यसै किसिमका कर्महरूको आज्ञा छैन । तर भेट भएको बेला कुराकानी गर्न सकिन्छ । ﴿عٰكِفُوْنَ فِى الْمَسٰجِدِ﴾ बाट यो भावार्थ लिइएको छ कि ऐतेकाफ़को लागि मस्जिद आवश्यक छ । चाहे स्त्री होस् वा पुरुष । पवित्र पत्नीहरू (नबी सल्लल्लाहु अलैहि वसल्लमका पत्नीहरू) ले पनि मस्जिदमा ऐतेकाफ़ गरेका छन्, यसकारण स्त्रीहरूलाई आफ्ना घरहरूमा ऐतेकाफ़मा बस्नु ठीक छैन । तर मस्जिदमा उनीहरूका लागि हरेक कुराको पुरुषहरूबाट अलग प्रबन्ध गर्नु आवश्यक छ, ताकि पुरुषको साथ कुनै प्रकारको सम्पर्क नहोस्, जबसम्म मस्जिदमा उचित एवं सुरक्षित तथा पुरुषहरूबाट बिल्कुलै अलग प्रबन्ध हुँदैन, स्त्रीहरुलाई मस्जिदमा ऐतेकाफ़मा बस्ने अनुमति दिनुहुँदैन र स्त्रीहरुलाई पनि यसको लागि हठ गर्नुहुँदैन । रमज़ानमा अन्तिम दशकको "ऐतकाफ" सुन्नत हो । जबसम्म पूरा सुरक्षा हुँदैन तबसम्म स्वेच्छात्मक इबादतबाट अलग रहनु श्रेष्ठ छ । फ़िकह (इस्लामी धर्मशास्त्र) को नियम छ (درء المفاسد أولى من جلب المصالح) भलाईहरूको प्राप्तिको अपेक्षा नराम्रो कुरालाई टाढा राख्नु उत्तम छ ।

[2]यो यस्तो व्यक्तिको विषयमा छ जोसित कसैको स्वत्व छ तथा स्वामीको पासमा कुनै प्रमाण छैन, जसको फाइदा उठाएर त्यो व्यक्ति न्यायलय अथवा अधिकृत अधिकारीबाट आफ्नो पक्षमा निर्णय गराउँछ र यसप्रकार अर्कोको स्वत्व अपहरण गर्दछ । यो अत्याचार हो र हराम छ । अदालतको निर्णय अत्याचार र हरामलाई उचित गर्न सक्दैन । यो अत्याचारी अल्लाह तआलाको समक्ष अपराधी हुनेछ । (इब्ने कसीर)

وَلَيْسَ الْبِرُّ بِأَنْ تَأْتُوا الْبُيُوتَ مِنْ ظُهُورِهَا وَلَٰكِنَّ الْبِرَّ مَنِ اتَّقَىٰ ۗ وَأْتُوا الْبُيُوتَ مِنْ أَبْوَابِهَا ۚ وَاتَّقُوا اللَّهَ لَعَلَّكُمْ تُفْلِحُونَ ﴿١٨٩﴾

मानिसहरू (को इबादत) को समय एवं हज्को मौसमको लागि हो (एहरामको स्थितिमा) र घरहरूको पछाडीबाट आउनु तिम्रो कुनै सत्यकर्म होइन, बरु सत्कर्मी त्यो हो जो अल्लाह (तआ़ला) सित तर्सन्छ । घरहरूमा तिनका ढोकाबाट आउने गर ।[1] तथा अल्लाहसित तर्सने गर, ताकि तिमी सफल होउ ।

وَقَاتِلُوا فِي سَبِيلِ اللَّهِ الَّذِينَ يُقَاتِلُونَكُمْ وَلَا تَعْتَدُوا ۚ إِنَّ اللَّهَ لَا يُحِبُّ الْمُعْتَدِينَ ﴿١٩٠﴾

(१९०) अल्लाहको मार्गमा उनीहरूसित युद्ध गर जो तिमीसित युद्ध गर्छन् र अत्याचार नगर ।[2] अल्लाह (तआ़ला) ले अत्याचारीलाई रुचाउँदैन ।

وَاقْتُلُوهُمْ حَيْثُ ثَقِفْتُمُوهُمْ وَأَخْرِجُوهُمْ مِنْ حَيْثُ أَخْرَجُوكُمْ ۚ وَالْفِتْنَةُ أَشَدُّ مِنَ الْقَتْلِ ۚ وَلَا تُقَاتِلُوهُمْ عِنْدَ الْمَسْجِدِ الْحَرَامِ

(१९१) र उनीहरूलाई जहाँ भेट्छौं त्यही मार र उनीहरूलाई निकाल जहाँबाट उनीहरूले तिमीलाई निकालेका छन् र (सुन) फित्ना (लडाई-झगडा, फसाद) हत्याभन्दा अधिक नराम्रो छ ।[3] र मस्जिदे हरामको

[1]अन्सार अज्ञान कालमा जब हज्ज अथवा उमर:को एहराम (हज्ज र उमर:मा प्रयोग गरिने एउटा विशेष पहिरन ।) बेरद्थे, र फेरि त्यस पश्चात कुनै कुराको आवश्यकता पर्दा आफ्ना घरहरूमा मुख्य द्वारबाट प्रवेश गर्दैनथे, बरु पछाडीको पर्खाल नाघेर प्रवेश गर्दथे, यसलाई उनीहरूले पुण्य ठान्दथे । अल्लाह तआ़लाले भन्यो कि यो पुण्य होइन (ऐसरुत्तफ़ासीर) यस आयतमा प्रथम पटक ती मानिसहरूसित युद्ध गर्ने आज्ञा दिइएको छ, जो सधैं मुसलामानहरूलाई हत्या गर्ने विचारमा रहन्थे । तैपनि ज्यादतीबाट रोकिएको छ, जसको अर्थ यो हो कि नकुल्च स्त्रीहरू, बच्चाहरू, तथा वृद्धाहरूलाई जसको योगदान युद्धमा छैन र हत्या नगर, वृक्ष आदि जलाइदिनु, पशुहरूलाई अकारण मारिदिनु पनि ज्यादति (अतिक्रमण) हो, यी कुराबाट बच्नुपर्छ । (इब्ने कसीर)

[3]इस्लाम धर्मको प्रारम्भिक कालमा मक्का शहरमा मुसलमान निर्बल तथा छरिएका थिए, यसकारण काफ़िरहरूसित युद्ध गर्न मनाही थियो, जब मुसलमान मक्का शहरबाट प्रवास गरी मदीना आए, (जसलाई इस्लाम धर्मको परिभाषामा हिज़रत भन्दछन्) तब मुसलमानको सम्पूर्ण शक्ति एकत्रित भयो, अनि उनलाई धर्म युद्ध (जिहाद गर्न) आज्ञा प्रदान गरियो । प्रारम्भमा उहाँ केवल उनीहरूसित युद्ध गर्नुहुन्थ्यो जो मुसलमानहरूसित युद्ध गर्दथे । परन्तु यसको पश्चात

حَتّٰى يُقٰتِلُوْكُمْ فِيْهِ ۚ فَاِنْ قٰتَلُوْكُمْ فَاقْتُلُوْهُمْ ۗ كَذٰلِكَ جَزَآءُ الْكٰفِرِيْنَ ﴿١٩١﴾

पासमा उनीसित लडाई नगर, जवसम्मकि तिमीसँग स्वयं युद्ध गर्दैनन् । यदि उनीहरू तिमीसित लड्छन् भने तिमी पनि उनीहरूलाई मार ।[1] काफ़िरहरूको बदला यही हो ।

فَاِنِ انْتَهَوْا فَاِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٩٢﴾

(१९२) यदि उनीहरू रोकिन्छन् भने अल्लाह (तआ़ला) अति क्षमाशील तथा दयालु छ ।

وَقٰتِلُوْهُمْ حَتّٰى لَا تَكُوْنَ فِتْنَةٌ وَّيَكُوْنَ الدِّيْنُ لِلّٰهِ ۖ فَاِنِ انْتَهَوْا فَلَا عُدْوَانَ اِلَّا عَلَى الظّٰلِمِيْنَ ﴿١٩٣﴾

(१९३) र उनीहरूसित युद्ध गर जवसम्मकि उपद्रव समाप्त नहोस् र अल्लाह (तआ़ला) को धर्म-विधान होस्, यदि उनीहरू रोकिन्छन् (भने तिमी पनि रोकिऊ) अत्याचार त केवल अत्याचारीहरूमाथि छ ।

اَلشَّهْرُ الْحَرَامُ بِالشَّهْرِ الْحَرَامِ وَالْحُرُمٰتُ قِصَاصٌ ۗ فَمَنِ اعْتَدٰى

(१९४) प्रतिष्ठित महिनाको लागि प्रतिष्ठित महिना छ र प्रतिष्ठाहरू आदान-प्रदानका हुन् ।[2] जो तिमीमाथि

त्यसलाई अरु विस्तृत गरियो, र मुसलमानहरूले आवश्यकता अनुसार काफ़िरहरूको पनि क्षेत्रमा गई युद्ध गरे । कुर्आन करीमले اعتداء (अत्याचार) बाट मनाही गरेको छ, यसकारण नबी करीम सल्लल्लाहु अलैहि वसल्लम आफ्ना सेनालाई विशेषरुपले निर्देश दिनुहुन्थ्यो कि अपभाग तथा विश्वासघात नगर्नु । कुनै लाशलाई नकुल्चनु, बच्चाहरू, स्त्रीहरू, गिर्जाघरहरूमा पूजामा लीन व्यक्तिहरू, त्यस धर्मका सन्तहरूको हत्या नगर्नू । यसैप्रकार वृक्षहरुलाई जलाउनुबाट र पशुहरूलाई अनावश्यक रुपले मार्नुबाट मनाही गर्नुभयो । (इब्ने कसीर-उद्धृत सहीह मुस्लिम आदि) फ़ितनाबाट तात्पर्य कुफ्र र शिर्क अनिश्वरवाद एवं मिश्रणबाद हो, जुन हत्याभन्दा ठूलो पाप हो, अत: यसलाई समाप्त गर्नको लागि ज़िहाद गर्नमा पछि हट्नु हुँदैन ।

[1]हरमको सीमामा युद्ध गर्न मनाही छ, तर यदि काफ़िर यसको आदर गर्दैनन्, र तिमीसित युद्ध गर्छन् भने तिमीलाई पनि उनीहरूसित युद्ध गर्ने आज्ञा छ ।

[2]६ हिज़रीमा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम आफ्ना चौध सय साथीहरूका साथ उमर: को लागि निस्कनु भएको थियो, तर मक्काका काफ़िरहरूले उनीहरूलाई मक्का जान दिएन र अन्तमा यो सन्धि भयो कि आउँदो वर्ष मुसलमान तीन दिनका लागि उमराको विचारले मक्का आउन सक्नेछन् । यो जुल्कादाको महिना थियो जुन आदरणीय महिनाहरूमध्ये एक हो । जब दोस्रो वर्ष सन्धि अनुसार मुसलमानहरू उमर:को विचारले निस्कन थाले तब अल्लाह तआ़लाले

عَلَيْكُمْ فَاعْتَدُوْا عَلَيْهِ بِمِثْلِ مَا اعْتَدٰى عَلَيْكُمْ ۪ وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ مَعَ الْمُتَّقِيْنَ ﴿١٩٤﴾

अत्याचार गर्दछ, तिमी पनि त्यसमाथि त्यसैप्रकारको अत्याचार गर, जुन तिमीमाथि गरिएको छ र अल्लाह (तआ़ला) सित तर्सिराख र जानीराख कि अल्लाह (तआ़ला) संयमीहरूको साथमा छ ।

وَاَنْفِقُوْا فِيْ سَبِيْلِ اللّٰهِ وَلَا تُلْقُوْا بِاَيْدِيْكُمْ اِلَى التَّهْلُكَةِ ۛ وَاَحْسِنُوْا ۛ اِنَّ اللّٰهَ يُحِبُّ الْمُحْسِنِيْنَ ﴿١٩٥﴾

(१९५) र अल्लाह (तआ़ला) को मार्गमा खर्च गर र आफ्नै हातबाट आफूलाई कष्टमा नपार ।[1] उपकार गर अल्लाह परोपकारीहरूसित प्रेम गर्दछ ।

وَاَتِمُّوا الْحَجَّ وَالْعُمْرَةَ لِلّٰهِ ۭ فَاِنْ اُحْصِرْتُمْ فَمَا اسْتَيْسَرَ مِنَ الْهَدْيِ ۚ وَلَا تَحْلِقُوْا رُءُوْسَكُمْ حَتّٰى

(१९६) र हज एवं उमर: अल्लाह तआ़लाको लागि पूरा गर ।[2] र यदि तिमी रोकिन्छौ भने जे पनि बलि उपलब्ध छ, त्यसलाई गर[3] र आफ्नो कपाल नखौर जब

---

यो आयत अवतरित गर्नुभयो । यसको अर्थ यो हो कि यसपटक पनि यदि मक्काका मिश्रणवादी यस महिनाको आदर एवं सम्मानलाई एकातिर पन्छ्यायी (गत वर्ष झैं) र तिमीलाई मक्कामा प्रवेश गर्नबाट रोक्छन् भने तिमी पनि उसको आदर र सम्मानको चिन्ता नगर, उनीसित पूर्णरुपले सामना गर्नू । आदर र सम्मान गर्नुमा बदला छ, अर्थात् उनीहरू आदर वा सम्मानको मर्यादा राख्दछन् भने तिमी पनि आदर र सम्मान गर । यदि उनीहरू यस्तो गर्दैनन् भने तिमी पनि यसको चिन्ता छाडि काफिरहरूलाई कठोर एवं असहनीय पाठ सिकाउ (इब्ने कसीर)

[1]यसबाट केहिले धन-व्ययको त्याग, कोहिले धर्म-युद्ध त्याग, तथा कोहिले पापमाथि पाप गर्दै जानु भावार्थ लिएका छन् । र यी सम्पूर्ण परिस्थितिहरू नाशका हुन्, जिहाद छाडिदिन्छौ अथवा जिहादको लागि माल-दान गर्ने छैनौ भने शत्रु शक्तिशाली हुनेछ, र तिमी कमजोर हुनेछौ, परिणाम तिम्रो विनाश ।

[2]अर्थात् हज अथवा उमर:को “एहराम” “मिकात”बाट नीयत गरी बाँधिहालेका छौ भने त्यसलाई पूरा गर्नु आवश्यक छ, चाहे स्वेच्छात्मक हज वा उमर: नै किन नहोस् । (ऐसरुत्तफ़ासीर)

[3]यदि मार्गमा शत्रु अथवा भयङ्कर रोगको कारणबाट रुकावट आउँछ भने एक जनावर (हदी) । बाखा, गाई अथवा ऊँट जे पनि उपलब्ध छ, त्यहीं बलि दिएर कपालको मुण्डन गर र एहराम फुकाईहाल, जुनप्रकार नबी सल्लल्लाहु अलैहि वसल्लम र उहाँका सहाबाले हुदैबियाको स्थानमा कुर्बानीहरूको बलि दिनुभएको थियो, हुदैबियाको ठाउँ “हरम” को सीमाभन्दा बाहिर छ । (फ़तहुल क़दीर)

يَبۡلُغَ الۡهَدۡىُ مَحِلَّهٗ‌ؕ فَمَنۡ كَانَ مِنۡكُمۡ مَّرِيۡضًا اَوۡ بِهٖۤ اَذًى مِّنۡ رَّاۡسِهٖ فَفِدۡيَةٌ مِّنۡ صِيَامٍ اَوۡ صَدَقَةٍ اَوۡ نُسُكٍ‌ۚ فَاِذَآ اَمِنۡتُمۡ فَمَنۡ تَمَتَّعَ بِالۡعُمۡرَةِ اِلَى الۡحَجِّ فَمَا اسۡتَيۡسَرَ مِنَ الۡهَدۡىِ‌ۚ فَمَنۡ لَّمۡ يَجِدۡ فَصِيَامُ ثَلٰثَةِ اَيَّامٍ فِى الۡحَجِّ وَسَبۡعَةٍ اِذَا رَجَعۡتُمۡ‌ؕ تِلۡكَ عَشَرَةٌ كَامِلَةٌ ‌ؕ ذٰلِكَ لِمَنۡ لَّمۡ يَكُنۡ اَهۡلُهٗ حَاضِرِى الۡمَسۡجِدِ الۡحَرَامِ‌ؕ

सम्म कि बलि, बलि स्थलसम्म नपुगोस्[1] तिमीमध्येबाट जो रोगी छ अथवा त्यसको टाउकोमा कुनै पीडा छ जसकारण त्यो आफ्नो कपालको मुण्डन गराउँछ, त त्यसमाथि फिद्या छ कि चाहे त त्यो ब्रत (रोज़ा) बसोस्, अथवा चाहन्छ भने दान देओस् अथवा बलि देओस् ।[2] तर जतिखेर शान्तिको स्थिति हुन्छ, त जो उमरादेखि लिएर हज़सम्म तमत्तुअ (लाभान्वित) गरोस्, अनि त्यसलाई जुनसुकै पनि बलि उपलब्ध छ, त्यसलाई गरोस् । जसमा सामर्थ्य छैन, त्यसले तीन रोज़ा (ब्रत) हजका दिनहरूमा राखोस् र सात दिन फर्केपछि यी पूरा दस भए ।[3] यो आदेश उनीहरूको लागि हो जो

र आउँदो वर्ष त्यसको क़ज़ा (साटो) देउ जस्तो नबी सल्लल्लाहु अलैहि वसल्लमले ६ हिज़रीको उमर:हको क़ज़ा (साटो) ७ हिज़रीमा दिनुभयो ।

[1]यसको प्रभाव ﴿وَأَتِمُّوا الْحَجَّ﴾ माथि छ र यसको सम्बन्ध शान्तिको स्थितिसँग छ अर्थात् शान्तिको स्थितिमा त्यसबेलासम्म टाउको कपाल नखौर (एहराम खोलेर हलाल नहोउ) जबसम्म हज़्ज तथा उमर:का सम्पूर्ण कार्य पूरा गर्दैनौ ।

[2]अर्थात् उसलाई कुनै यस्तो रोग भएको होस् अनि उसको कपाल खौरिन परोस् । त त्यसको फिद्या (प्रतिशोध) आवश्यक छ । हदीस अनुसार यस्ता व्यक्तिलाई आवश्यक छ कि त्यसले ६ भोका मानिसहरूलाई भोजन गराओस् अथवा एउटा बाखाको बलि देओस् अथवा तीन रोज़ा (ब्रत) राखोस् । रोज़ाहरूका अतिरिक्त शेष दुई प्रतिशोधको स्थानको विषयमा मतभेद छ । कोही भन्छन् कि भोजन अथवा बलि मक्कामै दिइयोस्, कोही भन्छन् कि रोज़ाहरूको जस्तै यसको लागि पनि स्थान निर्धारित छैन । शौकानीले यसै मतलाई समर्थन गर्नुभएको छ । (फ़तहुल क़दीर)

[3]हज तीन प्रकारले गर्न सकिन्छ, जसका तीन नाम छन्, (१) इफ़राद– केवल हज्ज़को नीयतले एहराम बाँध्नु, (२) क़िरान– हज र उमर: दुबैको नीयत एकसाथ गरी एहराम बाँध्नु । यी दुबै परिस्थितिहरूमा हज्ज़का सम्पूर्ण कर्म पूरा नगरिकन एहराम फुकाउनु जायज़ (उचित) छैन । (३) हज्ज़-ए-तमत्तुअ– यसमा पनि हज्ज़ र उमर: दुबैको विचार हुन्छ, तर पहिला मात्र उमर:को विचार गरी एहराम बाँधिन्छ, र पछि उमर: गरिकन एहराम फुकाईन्छ र पुन: आठ ज़िलहिज्जमा नै हज्ज़को निम्ति मक्काबाटै पुन: एहराम बाँधिन्छ, तमत्तुअको अर्थ हो, लाभ उठाउनु ।

وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ﴿١٩٦﴾

मस्जिद-ए-हराम (मक्का) नजिक का बासिन्दा होंइनन् ।[1] (मानिसहरू) ! अल्लाहसित तर्सने गर र जानिराख कि अल्लाह (तआला) कठोर यातनाहरू दिनेछ।

اَلْحَجُّ اَشْهُرٌ مَّعْلُوْمٰتٌ ۚ فَمَنْ فَرَضَ فِيْهِنَّ الْحَجَّ فَلَا رَفَثَ

(१९७) हज्जका महिना निश्चित छन्,[2] यसकारण जो यिनीहरूमा हज्ज निर्धारित गर्दछ, त्यो आफ्नी पत्नी

उठाउनु । अर्थात् फुकालेर उमरः र हज्जको मध्यमा लाभ लिइन्छ । हज्ज-किरान र हज्ज-तमत्तुअ दुबैमा एक हदी (एउटा जनावरको बलि) दिनुपर्छ। यस आयतमा यसै हज्ज तमुत्तअका आदेशहरूको वर्णन छ। तमत्तुअ गर्नेवाला शक्ति अनुसार १० ज़िलहिज्ज़ामा एउटा जनावरको बलि दिने यदि बलि दिने शक्ति छैन भने तीन दिन रोजा हज्जका दिनहरूमा र सात घर गएर पूरा गरोस् । हज्जका दिन जसमा रोजा बस्नु छ, ९ ज़िलहिज्जा (अराफ़ातको दिन) भन्दा पहिला अथवा तशरीकको दिनहरू हुन् । (फ़तहुल क़दीर)

[1]अर्थात् तमुत्तअ र त्यसको कारण हदी अथवा रोजा मात्र ती मानिसहरूको लागि छ, जो मक्कावासी होइनन्, तात्पर्य हरमका सीमामा अथवा यति टाढा होस् जसमा कस्र (नमाज़मा छूट) को नियम लागेको नहोस् । (इब्ने क़सीर कथनानुसार इब्ने ज़रीर)

[2]र यी हुन् शव्वाल, जीक़ाद र ज़िलहिज्जका दस दिन । तात्पर्य यो हो कि उमरः त वर्षका दिनहरूमा पनि हुनसक्दछ, तर हज्ज त केही निर्धारित दिनहरूमै हुन्छ, यसकारण त्यसको एहराम हज्जको महिनाको अतिरिक्त बाँध्नु उचित छैन । (इब्ने क़सीर)

**टिप्पणी :** हज्ज-किरान र इफ़रादको एहराम मक्कावासी मक्काबाट नै बाँध्नेछन्, तर तमुत्तअका लागि उमरःको एहराम बाँध्नको निम्ति हरमको सीमा बाहिर (जसलाई हिल्ल भन्दछन्) उनलाई जानु आवश्यक छ। (फ़तहुल क़दीर, किताबुल हज्ज बाबुल उमरः तथा मुअत्ता इमाम मलिक) यसैप्रकार मक्का शहरको बाहिर बाट आएका मानिसहरू (जसलाई आफ़ाकी भन्दछन्) हज्ज तमत्तुअमा ८ ज़िलहिज्ज़ामा मक्काबाटै एहराम बाँध्नेछन् । तर केही विद्वानहरूको कथन छ कि मक्कावासीहरूलाई पनि हरमको सीमाभन्दा बाहिर जानु आवश्यक छैन, यसकारण तिनीहरू हरप्रकारको हज़को लागि एहराम आफ्नो स्थानबाट बाँध्न सक्छन् ।

**सूचना :** हाफ़िज-इब्ने-कय्यिमले लेख्नु भएको छ कि रसूल सल्लल्लाहु अलैहि वसल्लमका कथनी तथा करनीबाट केवल दुंई प्रकारका उमरःको पुष्टि हुन्छ। एक त्यो जुन हज्ज तमत्तुअसँग गरिन्छ र दोस्रो उमरःमात्र जुन हज्जका दिनहरूका अतिरिक्त केवल उमरःका

وَلَا فُسُوقَ وَلَا جِدَالَ فِي الْحَجِّ ۗ وَمَا تَفْعَلُوا مِنْ خَيْرٍ يَعْلَمْهُ اللَّهُ ۗ وَتَزَوَّدُوا فَإِنَّ خَيْرَ الزَّادِ التَّقْوَىٰ ۚ وَاتَّقُونِ يَا أُولِي الْأَلْبَابِ ﴿١٩٧﴾

सँग सहवास गर्न, पाप गर्न र लडाई-झगडा गर्नबाट पन्छिइरहोस् ।[1] तिमी जुन पुण्यको कार्य गर्नेछौ, त्यसलाई अल्लाह (तआला) जान्दछ, र आफ्नो साथमा यात्रा व्यय लिने गर, सर्वश्रेष्ठ मार्ग व्यय त अल्लाहको भय हो[2] र हे बुद्धिमानहरू ! म सँग तर्सदै गर ।

لَيْسَ عَلَيْكُمْ جُنَاحٌ أَنْ تَبْتَغُوا فَضْلًا مِنْ رَبِّكُمْ ۚ فَإِذَا أَفَضْتُمْ مِنْ عَرَفَاتٍ فَاذْكُرُوا اللَّهَ عِنْدَ الْمَشْعَرِ الْحَرَامِ ۖ وَاذْكُرُوهُ كَمَا هَدَاكُمْ وَإِنْ كُنْتُمْ مِنْ قَبْلِهِ لَمِنَ الضَّالِّينَ ﴿١٩٨﴾

(१९८) तिमीलाई आफ्नो प्रभुको कृपा खोज्नमा कुनै पाप छैन ।[3] जब तिमी अराफ़ातबाट फर्कन्छौ त मशअरे हराम (मुज़्दलिफा) का निकट अल्लाहको महिमागान गर र उसको महिमाको वर्णन त्यस प्रकार गर, जसरी उसले तिमीलाई निर्देश दिएको छ, हाँलाकि तिमी त्यसभन्दा पहिला पथभ्रष्टहरूमध्ये थियौ ।[4]

---

नीयतले नै यात्रा गरिन्छ । शेष हरमबाट गई कुनै निकटवर्ती हिल्ल (हरमको सीमा बाहिर) बाट उमर:को लागि एहराम बाँध्नु अपुष्ट छ । (ज़ादुल मआद, भाग-२ नयाँ प्रकाशन)

[1]सहीह बुख़ारी र मुस्लिममा हदीस छ ।

«مَنْ حَجَّ هَذَا الْبَيْتَ، فَلَمْ يَرْفُثْ، وَلَمْ يَفْسُقْ، خَرَجَ مِنْ ذُنُوبِهِ كَيَوْمِ وَلَدَتْهُ أُمُّهُ» (बुख़ारी, किताबुल मोहसर) "जसले हज्ज गर्‍यो र नराम्रा लडाई-झगडाका कुराहरूबाट बच्यो, त्यो पापबाट यसप्रकार पवित्र भइहाल्यो, जस्तो त्यस दिन पवित्र थियो, जुन दिन त्यसकी आमाले जन्म दिएकि थिइन् ।"

[2]तक़्वा (अल्लाह तआलाको भय) सित तात्पर्य यहाँ भीख माँग्नुबाट बच्नु हो । केही मानिसहरू बिना मार्ग व्यय लिएर नै हज्जको लागि निस्किहाल्छन् र भन्छन् कि हाम्रो त अल्लाहमाथि पूर्ण भरोसा छ, अल्लाहले भरोसाको यस भावार्थलाई गर्दा खेरि र मार्ग व्यय साथमा लग्ने कुरोमा जोड दिएको छ ।

[3]कृपाको अर्थ व्यापार एवं व्यवसाय हो अर्थात् हजको यात्रा गर्नेबेला व्यापार गर्नमा कुनै प्रतिबन्ध छैन ।

[4]नौं ज़िलहिज्जामा सूर्योदयदेखि लिएर सूर्यास्तसम्म अरफ़ातको मैदानमा रुक्नु हज्जको सर्वश्रेष्ठ स्तम्भ हो, जसको विषयमा हदीसमा भनिएको छ الْحَجُّ عَرَفَةُ (अरफ़ातमा रुक्नु नै हज्ज हो) यहाँ मग़रिब (सायंकालीन) को नमाज़ पढ्ने होइनन्, बरु मुज़्दलिफ़ाका स्थानमा पुगेर मग़रिब (सायंकालीन) को नमाज़ तीन

ثُمَّ اَفِيۡضُوۡا مِنۡ حَيۡثُ اَفَاضَ النَّاسُ وَاسۡتَغۡفِرُوا اللّٰهَ ؕ اِنَّ اللّٰهَ غَفُوۡرٌ رَّحِيۡمٌ ﴿۱۹۹﴾

(१९९) अनि तिमी त्यस स्थानबाट फर्क, जुन स्थानबाट सबै फर्कन्छन् ।[1] र अल्लाह (तआला) सित क्षमा-याचना गरिराख, नि:सन्देह अल्लाह (तआला) क्षमाशील अति कृपालु छ ।

فَاِذَا قَضَيۡتُمۡ مَّنَاسِكَكُمۡ فَاذۡكُرُوا اللّٰهَ كَذِكۡرِكُمۡ اٰبَآءَكُمۡ اَوۡ اَشَدَّ ذِكۡرًا ؕ فَمِنَ النَّاسِ مَنۡ يَّقُوۡلُ رَبَّنَآ اٰتِنَا فِى الدُّنۡيَا وَمَا لَهٗ فِى الۡاٰخِرَةِ مِنۡ خَلَاقٍ ﴿۲۰۰﴾

(२००) अनि जब तिमी हज्जको प्रत्येक कार्य पूरा गरिसकेका हुन्छौ त अल्लाह (तआला) लाई स्मरण गर, जुन प्रकारले तिमी आफ्ना पूर्वजहरूलाई स्मरण गर्दथ्यौ बरु त्योभन्दा अधिक ।[2] केही यस्ता पनि छन्, जो भन्दछन्, "हाम्रो प्रभु ! हामीलाई यस संसारमा नै प्रदान गरिदेउ, यस्ता मानिसहरूलाई परलोकमा कुनै भाग छैन ।"

रकात र ईशा (रात्रिकालीन) को नमाज दुई रकात एक अज़ान र दुई एकामतका साथ पढ्नु पर्छ, मुज़्दलिफालाई "मशअरुल हराम" भनिएको छ, किनभने यो हरमको सीमाभित्र छ । यहाँ अल्लाहको स्मरणको लागि जोड दिइएको छ । यहाँ रात्रि व्यतीत गर्नुपर्छ, फज्रको नमाज़ ग़लस (अँध्यारो) मा अर्थात् प्रथम समयमा पढेर सूर्योदयसम्म अल्लाहको यादमा लीन रहनुपर्छ र सूर्योदयका उपरान्त "मिना" को स्थानको लागि प्रस्थान गर्नुपर्छ ।

[1]उपरोक्त वर्णित विधिपूर्वक श्रेणी अनुसार "अरफ़ात" जानु र त्यहाँ विराम गरेर फिर्ता आउनु आवश्यक भनिएको छ, तर अरफ़ात हरमबाट बाहिर भएको कारण मक्काका कुरैश अरफ़ातसम्म जाँदैनथे, वरु मुज़्दलिफाबाट नै फर्किहाल्दथे, अत: आदेश दिइराखिएको छ कि जहाँबाट सबै फर्केर आउँछन्, त्यहींबाट फर्केर आउ अर्थात् अरफ़ातबाट ।

[2]अरबका मानिसहरू हज्ज़को पश्चात मिनाको स्थानमा मेलाको आयोजन गर्दथे र आ-आफ्ना पूर्वजहरूका गुणगान गर्दथे । मुसलमानहरूसित भनिंदै छ कि दस ज़िल्हिज्जामा (स-साना ढुङ्गाहरू) कंकरीहरूले हानेर, बलि दिएर, कपालको मुण्डन गराए र काअ्बाको परिक्रमा गरेर र सफ़ा र मरवहको मध्ये सअई गरेर छुट्कारा पाउँछौ भने त्यसको पश्चात तीन दिन (१०, ११ र १२ जिल्हिज्जा तर १२ जिल्हिज्जामा मिना छोड्नुछ भने सूर्यास्त अघि त्यहाँबाट प्रस्थान गर्नुपर्छ नत्र राती त्यहाँ नै व्यतित गर्नुपर्छ अनि १३ तारिखमा जम्रातलाई ढुङ्गा हानि प्रस्थान गर्नुपर्छ ।) र त्यहाँ अल्लाहलाई धेरै स्मरण गर, जस्तो कि अज्ञानताको समय तिमी आफ्ना पूर्वजहरूका चर्चा गर्दथ्यौ ।

وَمِنْهُمْ مَّنْ يَّقُوْلُ رَبَّنَآ اٰتِنَا فِى الدُّنْيَا حَسَنَةً وَّفِى الْاٰخِرَةِ حَسَنَةً وَّقِنَا عَذَابَ النَّارِ ﴿٢٠١﴾

(२०१) केही मानिसहरू यस्ता पनि छन्, जो भन्दछन्, "हे हाम्रा पालनकर्ता ! हामीलाई यस संसारमा नै भलाई प्रदान गर ।[1] र परलोकमा पनि भलाई (कल्याण) प्रदान गर र हामीलाई नरकको यातनाबाट बचाइदेउ ।"

اُولٰٓئِكَ لَهُمْ نَصِيْبٌ مِّمَّا كَسَبُوْا ؕ وَاللّٰهُ سَرِيْعُ الْحِسَابِ ﴿٢٠٢﴾

(२०२) यी ती मानिसहरू हुन्, जसका लागि उनीहरूका कर्मको भाग छ र अल्लाह (तआला) शीघ्र हिसाब लिनेवाला छ ।

وَاذْكُرُوا اللّٰهَ فِىْٓ اَيَّامٍ مَّعْدُوْدٰتٍ ؕ فَمَنْ تَعَجَّلَ فِىْ يَوْمَيْنِ فَلَآ اِثْمَ عَلَيْهِ ۚ وَمَنْ تَاَخَّرَ فَلَآ اِثْمَ عَلَيْهِ ۙ لِمَنِ اتَّقٰى ؕ وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّكُمْ اِلَيْهِ تُحْشَرُوْنَ ﴿٢٠٣﴾

(२०३) र अल्लाह (तआला) को स्मरण ती गणनाका केही दिनहरू (तशरीकका दिन) मा गर ।[2] दुई दिनको शीघ्रता गर्नेवालालाई कुनै पाप छैन, र जो पछि छ, त्यसलाई पनि कुनै पाप छैन ।[3] यो परहेज़गार (महान व्यक्ति) को लागि छ, एवं अल्लाह (तआला) सित तर्सने गर, र जानिराख कि तिमीसबै उसैतिर एकत्रित गरिनेछौ ।

[1]अर्थात् पुण्यका कार्य गर्ने अवसर प्राप्त हुनु, अर्थात् ईमानवाला संसारमा रहेर सांसारिक वैभवको कामना गर्दैनन्, बरु पुण्य गर्ने अवसर प्राप्त गर्ने कुरोको कामना गर्दछन् । नबी सल्लल्लाहु अलैहि वसल्लम यस दुआलाई अत्याधिक पढ्ने गर्नु हुन्थ्यो । काबाको परिक्रमा गर्दाखेरि मानिस प्रत्येक फन्कोमा भिन्न-भिन्नै मनगढन्त प्रार्थनाहरू (दुआ) पढ्छन्, जुन बनावटी हुन् । परिक्रमा गर्दाखेरि यही दुआ ﴿رَبَّنَا آتِنَا فِي الدُّنْيَا حَسَنَةً﴾ यमानी कुनाबाट हजरे अस्वद (कालो पत्थर) को मध्यमा पढ्नु सुन्नत अनुसारको कर्म हो ।

[2]तात्पर्य तश्रीकका दिन हुन्, अर्थात ११, १२ तथा १३ ज़िलहिज्जा । यी दिनहरूमा अल्लाह तआलाको वर्णनबाट तात्पर्य यो हो कि उच्च स्वरका साथ सुन्नत अनुसार निर्धारित तक्बीर भनियोस् । केवल अनिवार्य (फ़र्ज़) नमाज़हरू पश्चात मात्र होइन, (जस्तो कि एउटा अस्पष्ट हदीसको आधारमा प्रसिद्ध छ), बरु हर समय यो तक्बीर पढियोस् (अल्लाहु अक्बर, अल्लाहु अक्बर, अल्लाहु अक्बर, ला ईलाहा इल्लल्लाह, वल्लाहु अक्बर, अल्लाहु अक्बर वलिल्लाहिलहम्द) जमरातलाई पत्थरहरू हान्दाखेरि नै पत्थरका साथ तक्बीर पढ्नु सुन्नत अनुरुप छ । (नैलुल अवतार भाग ५ पृष्ठ ८६)

[3]जमरातलाई ढुङ्गाहरू हान्नु, तीन दिन श्रेष्ठ छ, तर यदि दुई दिन पश्चात मिनाबाट फर्किहाल्छ भने त्यसको पनि आज्ञा छ ।

وَمِنَ النَّاسِ مَنْ يُّعْجِبُكَ قَوْلُهٗ فِي الْحَيٰوةِ الدُّنْيَا وَيُشْهِدُ اللّٰهَ عَلٰى مَا فِيْ قَلْبِهٖ ۙ وَهُوَ اَلَدُّ الْخِصَامِ ﴿٢٠٤﴾

(२०४) र केही मानिसहरूका सांसारिक कुरा तपाईंलाई प्रसन्न गरिदिन्छन् र त्यो आफ्नो हृदयका कुरामा अल्लाहलाई साक्षी राख्दछ, हालाँकि वास्तवमा त्यो अति झगडालू छ ।[1]

وَاِذَا تَوَلّٰى سَعٰى فِي الْاَرْضِ لِيُفْسِدَ فِيْهَا وَيُهْلِكَ الْحَرْثَ وَالنَّسْلَ ؕ وَاللّٰهُ لَا يُحِبُّ الْفَسَادَ ﴿٢٠٥﴾

(२०५) र जब त्यो फर्केर जान्छ, त धर्तीमा उपद्रव फैलाउन र खेती एवं मानव सन्ततिको विनाशको प्रयत्नमा लागिरहन्छ र अल्लाह (तआला) उपद्रवलाई रुचाउँदैन ।

وَاِذَا قِيْلَ لَهُ اتَّقِ اللّٰهَ اَخَذَتْهُ الْعِزَّةُ بِالْاِثْمِ فَحَسْبُهٗ جَهَنَّمُ ؕ وَلَبِئْسَ الْمِهَادُ ﴿٢٠٦﴾

(२०६) र जब उसित भनिन्छ कि अल्लाहसित तर्स, तब घमण्डले उसलाई झन पापमा संलग्न गरिदिन्छ । यस्ताको लागि केवल नरक नै छ, र निःसन्देह त्यो साह्रै नराम्रो वासस्थान हो ।

وَمِنَ النَّاسِ مَنْ يَّشْرِيْ نَفْسَهُ ابْتِغَآءَ مَرْضَاتِ اللّٰهِ ؕ وَاللّٰهُ

(२०७) र कोही यस्ता पनि छन्, जसले अल्लाह (तआला) को प्रसन्नताको प्राप्तिको लागि आफ्नो ज्यानसम्म बेचिदिन्छन् ।[2] र

---

[1]केही अस्पष्ट कथाका अनुसार यो आयत एउटा मुनाफिक (अवसरवादी) अखनस पुत्र शुरैक सकफीको लागि अवतरित भयो, तर सही कुरो यो हो कि यसको तात्पर्य सबै मुनाफिक एवं घमण्डीहरूसित छ, जसमा यी घृणित नराम्रा कुराहरू पाइन्छन्, जुन कुरआनमा उनको विषयमा वर्णित गरिएको छ ।

[2]भन्दछन् कि यो आयत आदरणीय सुहैब रुमीको लागि अवतरित भएको हो, जब उनी हिज्रत गर्न लागे, तब काफिरहरूले भने कि यो सम्पत्ति त यहीकै कमाइ हो, यसलाई हामीले साथमा लग्न दिन्नौं, आदरणीय सुहैब रुमीले यी सारा माल उनीहरूलाई सुम्पिदिए र धर्म साथमा लिएर नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भए । उहाँले यो सुनेर भन्नुभयो "सुहैबले लाभदायक व्यापार गरेको छ ।" दुई पटक भन्नुभयो । (फ़तहुल क़दीर) तर यो आयत पनि सामान्य रुपले प्रसिद्ध छ र ती सबै ईमानवाला र अल्लाह तआलासित तर्सनेवाला एवं संसारको अपेक्षा धर्म र परलोकलाई श्रेष्ठता दिनेवालाहरुलाई पनि सम्मिलित

رَءُوفٌ بِالْعِبَادِ ﴿٢٠٧﴾

अल्लाह (तआला) आफ्ना दासहरू (भक्तहरू) प्रति बडो कृपालु छ ।

يَاأَيُّهَا الَّذِينَ آمَنُوا ادْخُلُوا فِي السِّلْمِ كَافَّةً وَلَا تَتَّبِعُوا خُطُوَاتِ الشَّيْطَانِ إِنَّهُ لَكُمْ عَدُوٌّ مُبِينٌ ﴿٢٠٨﴾

(२०८) हे ईमानवालाहरू ! इस्लाममा पूर्णरुपले प्रवेश गर र शैतानका पद चिन्हरूको अनुकरण नगर ।[1] त्यो तिम्रो खुल्ला रूपमा शत्रु हो ।

فَإِنْ زَلَلْتُمْ مِنْ بَعْدِ مَا جَاءَتْكُمُ الْبَيِّنَاتُ فَاعْلَمُوا أَنَّ اللَّهَ

(२०९) यदि तिमी निशानीहरू (प्रमाण) आइसके पश्चात पनि विचलित हुन्छौ भने, जानीराख

गर्दछ, किनभने यसप्रकारका सबै आयतहरूका विषयमा, जुन कुनै व्यक्ति विशेषको लागि अवतरित भया, यही नियम छ, । العبرة بعموم اللفظ لا بخصوص السبب अर्थात् शब्दको सामान्य अर्थ लिइने छ, विशेष कारण होइन, जुन प्रकारले अखननस बिन शुरैक (जसको वर्णन पछिल्लो आयतमा भइसकेको छ) । कुकर्महरूको एक उदाहरण हो, जुन त्यस व्यक्तिको लागि त्यसको अनुरुप हुनेछ, जसको कर्म यसको अनुरुप हुनेछ। र सुहैब रज़ी अल्लाह अन्हु सत्कर्म र पूर्ण ईमानका एउटा उदाहरण हुन्, यो हर त्यस व्यक्तिको लागि हो, जो तिनका अनुरुप सत्कर्महरूबाट अलङ्कृत हुनेछ ।

[1] ईमानवालाहरूलाई भनिदैछ कि पूर्णरुपले इस्लाममा प्रवेश गरिहाल । यसप्रकार नगर कि जुन कुराहरू तिम्रा आफ्ना लाभ तथा आकांक्षा अनुसार छन्, त तिनीहरूलाई अपनाउ, शेषलाई छाडिदेउ । यसैप्रकार जुन कुरा तिमी छोडेर आएका छौं, त्यसलाई इस्लाम धर्ममा मिश्रित गर्ने प्रयत्न नगर, बरु मात्र इस्लाम धर्मका नियमहरूलाई पूर्णरुपले अपनाउ । यसबाट धर्ममा नयाँ प्रथाहरूलाई सम्मिलित गर्नबाट नकारिएको छ । र आधुनिक धर्मनिरपेक्ष विचार जुन कि इस्लाम धर्मलाई पूर्णरुपले अपनाउनको लागि तयार छैन, तिनको पनि खण्डन गरिएको छ । बरु जुन धर्मलाई मस्जिदहरूका इबादतहरूसम्म सीमित गर्न चाहन्छ र राजनीति तथा राजकीय विधायिकाहरूबाट अलग राख्न चाहन्छ । यसैप्रकार जनतालाई पनि बुझाइदैछ, जो प्रथा तथा रीति-रिवाज र क्षेत्रीय संस्कृत लोक कथाहरूलाई रुचाउँछन् र तिनीहरूलाई छाड्नको निम्ति प्रयास पनि गर्दैनन्, जस्तै मृत्यु र विवाहका समय अनावश्यक धन खर्च गर्नु, जस्तो कि अन्य धर्मको रीति र प्रथाबाट हुन्छ। र भनिदैंछ कि शैतानका पदचिन्हहरूमा नहिंड, जो तिमीलाई इस्लाम धर्मको विपरीत उपरोक्त वर्णित कुराहरूका लागि बडो सुन्दर तर्क गर्दछ, नराम्रो कुरामा मन लोभ्याउन त्यस माथि आवरण ढाक्छ र नयाँ रीतिहरूलाई पनि पुण्य सिद्ध गर्दछ ताकि त्यसका मन लोभ्याउने जालमा अल्झिराखोस् ।

عَزِيزٌ حَكِيمٌ ۝٢٠٩

कि अल्लाह (तआ़ला) सर्वशक्तिशाली र विधाता छ ।

هَلْ يَنظُرُونَ إِلَّا أَن يَأْتِيَهُمُ اللَّهُ فِي ظُلَلٍ مِّنَ الْغَمَامِ وَالْمَلَائِكَةُ وَقُضِيَ الْأَمْرُ ۚ وَإِلَى اللَّهِ تُرْجَعُ الْأُمُورُ ۝٢١٠

(२१०) के मानिसहरूलाई यस कुराको प्रतीक्षा छ कि अल्लाह (तआ़ला) स्वयं बादलहरूको समूहमा आओस्, एवं फरिश्ताहरू पनि, र कामको अन्त्य गरियोस्,[1] अल्लाहतिर नै सम्पूर्ण कार्य फर्काइनेछन् ।

سَلْ بَنِي إِسْرَائِيلَ كَمْ آتَيْنَاهُم مِّنْ آيَةٍ بَيِّنَةٍ ۗ وَمَن يُبَدِّلْ نِعْمَةَ اللَّهِ مِن بَعْدِ مَا جَاءَتْهُ فَإِنَّ اللَّهَ شَدِيدُ الْعِقَابِ ۝٢١١

(२११) इस्राईलका सन्तानसित सोध कि हामीले उनीहरूलाई कति स्पष्ट निशानीहरू प्रदान गरेका थियौं ।[2] र जो अल्लाह (तआ़ला) को पुरस्कार आफ्नो पासमा पुगिसके पश्चात परिवर्तन गरे[3] (उनी जानिहालन्) कि अल्लाह (तआ़ला) पनि कठोर यातनाहरू दिनेछ ।

زُيِّنَ لِلَّذِينَ كَفَرُوا الْحَيَاةُ الدُّنْيَا وَيَسْخَرُونَ مِنَ الَّذِينَ آمَنُوا ۘ

(२१२) काफ़िरहरूका लागि सांसारिक जीवन सुशोभित गरिएको छ, र तिनी ईमानवालाहरूसित

[1]यो या त प्रलय (केयामत) को दृश्य हो (जस्तो कि केही टीकाकारहरूले वर्णित गरेका छन्) । (इब्ने कसीर) अर्थात् के यिनीहरू केयामत आउने कुराको प्रतीक्षा गरिराखेका छन् ? या त त्यसको अर्थ हो कि अल्लाह तआ़ला फरिश्ताहरूको जुलुसमा र बादलहरूको छायाँमा उनको अगाडि आओस् र निर्णय गरोस्, अनि उनीहरूले विश्वास गर्नेछन्, तर यस्ता इस्लाम स्वीकार गर्ने योग्य नै छैनन्, यसकारण इस्लाम धर्म स्वीकार गर्न विलम्ब नगर र शीघ्र इस्लाम धर्मलाई स्वीकार गरी आफ्नो परलोक सुधार ।

[2]उदाहरणत: मूसाको छडी जसद्वारा हामीले जादूगरहरूको जादू तोड्यौं, समुद्रमा मार्ग बनायौं, ढुङ्गाबाट बारह स्रोत निकाल्यौं, बादलहरूको छायाँ, "मन्न व सलवा" को अवतरण आदि जुन अल्लाह तआ़लाको शक्ति र हाम्रा पैग़म्बरहरूको सत्यताको प्रमाण थिए, तर त्यस पश्चात पनि उनीहरूले अल्लाह तआ़लाका आदेशहरूको अवहेलना गरे ।

[3]अनुकम्पामा परिवर्तन गर्नुबाट तात्पर्य यही हो कि विश्वासको साटो अविश्वास गरे तथा विमुखताको मार्ग अपनाए ।

وَالَّذِينَ اتَّقَوْا فَوْقَهُمْ يَوْمَ الْقِيَامَةِ ۗ وَاللَّهُ يَرْزُقُ مَن يَشَاءُ بِغَيْرِ حِسَابٍ ﴿٢١٢﴾

ठट्टा-व्यङ्ग गर्दछन् ।[1] यद्यपि जसले धर्मपरायणताका गुण गरे, प्रलय (केयामत) का दिन उनीहरूभन्दा उच्चतम हुनेछन् । अल्लाह (तआ्ला) जसलाई चाहन्छ असीमितरुपमा जीविका प्रदान गर्दछ ।[2]

كَانَ النَّاسُ أُمَّةً وَاحِدَةً فَبَعَثَ اللَّهُ النَّبِيِّينَ مُبَشِّرِينَ وَمُنذِرِينَ وَأَنزَلَ مَعَهُمُ الْكِتَابَ بِالْحَقِّ لِيَحْكُمَ بَيْنَ النَّاسِ فِيمَا اخْتَلَفُوا فِيهِ ۚ وَمَا اخْتَلَفَ فِيهِ إِلَّا الَّذِينَ أُوتُوهُ مِن بَعْدِ مَا جَاءَتْهُمُ الْبَيِّنَاتُ بَغْيًا بَيْنَهُمْ ۖ فَهَدَى اللَّهُ

(२१३) वास्तवमा मानिसहरू एउटै मत थिए ।[3] अनि अल्लाह (तआ्ला) ले नबीहरूलाई शुभ-सन्देश दिन र सचेत गर्न पठायो र उनीहरूका साथ सत्यशास्त्र उतार्‍यो, ताकि मानिसहरूको प्रत्येक मतभेदको निर्णय गरोस् । र केवल उनीहरूले जे उनीहरूलाई दिइएको थियो, आफ्नो पासमा आइसके उपरान्त आपसी द्वेष एवं घमण्डको कारण त्यसमा

[1]किनभने मुसलमानहरूको बहुमत निर्धनहरूमा आधारित थियो, जो सांसारिक वैभव र आरामबाट मुक्त थिए यसैकारण काफ़िर अर्थात् मक्काका कुरैश उनीहरूको उपहास गर्दथे, जस्तो कि धनवानहरूको हर समयमा यही कर्म रहिआएको छ ।

[2]अधर्मी जुन निर्धन एवं सोभा मुसलमानहरूको उपहास तथा परिहास गर्दथे, त्यसको वर्णन गरी भनिदैछ कि केयामतका दिन यी निर्धनहरू आफ्नो अल्लाह तआ्लाको आज्ञा पालनको कारणले उच्च पदहरूमा आसीन हुनेछन्, "अत्याधिक बृत्ति" को सम्बन्ध आखिरतको अतिरिक्त संसारसँग पनि हुनसक्छ, कि केही वर्षहरू पश्चात यी निर्धनहरूका लागि विजयको ढोका खोलियो, जसको कारण वृत्तिको अधिकता भयो ।

[3]अर्थात् एकेश्वरवाद, यी आदरणीय आदमदेखि आदरणीय नूहसम्म, अर्थात् दस शताब्दीसम्म मानिसहरू मात्र एकेश्वरवादी थिए, अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लमका सहचर व्याख्याकारहरूले आयतमा فاختلفوا लाई लिप्त मानेका छन्, अर्थात् त्यस पश्चात शैतानको शंका उत्पन्न गर्नाले उनीहरूमध्ये मतभेद भयो र मूर्तिहरू एवं प्राकृतिक दृश्यहरूको पूजाको साधारण चलन भयो فبعث यसको आधार فاختلفوا (जुन लिप्त छ) मा छ, तर अल्लाह तआ्लाले नबीहरूलाई किताबहरूका साथ पढायो ताकि उनीहरू यसको आधारमा मानिसहरू बीच मतभेदको निर्णय र सत्य एवं एकेश्वरवादलाई स्थापित तथा स्पष्ट गरोस् । (इब्ने कसीर)

الَّذِينَ آمَنُوا لِمَا اخْتَلَفُوا فِيهِ مِنَ الْحَقِّ بِإِذْنِهِ ۗ وَاللَّهُ يَهْدِي مَن يَشَاءُ إِلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿٢١٣﴾

विभेद गरे।[1] यसकारण अल्लाह (तआ़ला) ले ईमानवालाहरूको यस मतभेदमा पनि सत्यतिर आफ्नो अनुमतिद्वारा मार्गदर्शन गर्‍यो।[2] र अल्लाह जसलाई चाहन्छ सोझो मार्गतिर अग्रसर गर्दछ।

أَمْ حَسِبْتُمْ أَن تَدْخُلُوا الْجَنَّةَ وَلَمَّا يَأْتِكُم مَّثَلُ الَّذِينَ خَلَوْا مِن قَبْلِكُم ۖ مَّسَّتْهُمُ الْبَأْسَاءُ وَالضَّرَّاءُ وَزُلْزِلُوا حَتَّىٰ يَقُولَ

(२१४) के तिमीले यो भन्ठानेका छौ कि स्वर्गमा जानेछौ ? यद्यपि अहिलेसम्म तिमीमाथि त्यो स्थिति आएको छैन, जुन तिमीभन्दा अघिकालाई आयो,[3] उनीहरूलाई निर्धनता एवं रोग पुग्यो, र

[1]मतभेद सधैं सत्यमार्गबाट विचलित भएकै कारण हुन्छ, यस विचलनको आधार अहंकार, घमण्ड, पक्षपात, एवं बैमनुष्यता नै बन्दछ। मुस्लिम समुदायमा जबसम्म यो विचलन आएन, यो समुदाय आफ्नो शुद्धरुपमा स्थित एवं मतभेदबाट सुरक्षित रह्यो, तर अनुकरणवाद तथा तर्क-वितर्कले सत्यमार्ग छाड्ने जुन मार्ग खोल्यो, त्यसबाट मतभेदको परिधि फैलिदै गयो, यहाँसम्मकि समुदायको एकता एउटा असम्भव कुरा बनेर रहेको छ।

[2]अतएवं उदाहरणत: किताबवालाहरूले जुमअमा मतभेद गरे, यहूदीहरूले शनिवारलाई र इसाईहरूले रविवारलाई आफ्नो पवित्र दिन माने त अल्लाह तआ़लाले मुसलमानहरूलाई "जुमअमा" को दिन प्रयोग गर्ने सौभाग्य प्रदान गर्‍यो, उनीहरूले आदरणीय ईसाको विषयमा मतभेद गरे र यहूदीहरूले उनलाई झुठ्लाए र उनकी आमा आदरणीय मरियममाथि आरोप लगाए, यसका विपरीत इसाईहरूले उनलाई अल्लाहको छोरा र पूज्य बनाइदिए। अल्लाहले मुसलमानहरूलाई उनको विषयमा सत्यपक्ष अपनाउन शक्ति प्रदान गर्‍यो कि उनी अल्लाहका पैग़म्बर (दूत) र उसका आज्ञाकारी भक्त थिए। आदरणीय इब्राहीमको विषयमा पनि उनीहरूले मतभेद गरे, एकले यहूदी अर्कोले इसाई भन्यो, मुसलमानहरूलाई अल्लाह तआ़लाले साँचो कुरा भने कि उनी अल्लाहका आज्ञाकारी र एकाग्र थिए र यसप्रकार कैयन् प्रश्नहरूमा अल्लाह (तआ़ला) ले आफ्नो कृपा अर्थात् आफ्नो दयाले मुसलमानहरूलाई सोझो मार्ग देखायो।

[3]मदीनातिर हिज़रत (मक्काबाट मदीना इस्लाम धर्म स्वीकार गर्नुका कारणले जुन हिज़रत भएको छ) का पश्चात जब मुसलमानहरूलाई यहूदी, अवसरवादी तथा अरबका मूर्तिपूजकहरूद्धारा विभिन्न प्रकारका कष्ट एवं कठिनाई पुर्‍याए पश्चात केही मुसलमानहरूले नबी सल्लल्लाहु अलैहि वसल्लमसित शिकायत (आलोचना) गरे जसपश्चात मुसलमानहरूलाई अल्लाह तआ़लाले यो आयत अवतरित गरी सान्त्वना दियो र स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

الرَّسُوْلُ وَالَّذِيْنَ اٰمَنُوْا مَعَهٗ مَتٰى نَصْرُ اللّٰهِ ؕ اَلَآ اِنَّ نَصْرَ اللّٰهِ قَرِيْبٌ ﴿٢١٤﴾

उनीहरू यहाँसम्म हल्लाइए कि रसूल र उनका साथका निष्ठावान मानिसहरु भन्नलागे कि अल्लाहको सहायता कहिले आउनेछ ? सुनिराख कि अल्लाहको सहायता नजिक नै छ ।[1]

يَسْـَٔلُوْنَكَ مَاذَا يُنْفِقُوْنَ ؕ قُلْ مَآ اَنْفَقْتُمْ مِّنْ خَيْرٍ فَلِلْوَالِدَيْنِ وَالْاَقْرَبِيْنَ وَالْيَتٰمٰى وَالْمَسٰكِيْنِ وَابْنِ السَّبِيْلِ ؕ وَمَا تَفْعَلُوْا مِنْ خَيْرٍ فَاِنَّ اللّٰهَ بِهٖ عَلِيْمٌ ﴿٢١٥﴾

(२१५) तपाईंसित सोध्छन् कि उनीहरूले के खर्च गरौं, तपाई भनिदिनुस् कि जुन धन तिमी खर्च गर्दछौ त्यो माता-पिताको लागि तथा सम्बन्धिहरू एवं अनाथ र निर्धन तथा यात्रीहरुको लागि हो ।[2] र तिमी जे-जति भलाई (पुण्य) गर्नेछौ, अल्लाह (तआ़ला) लाई त्यसको ज्ञान छ ।

---

तिमीभन्दा पहिला मानिसहरूलाई उनीहरूको टाउको देखि लिएर खुट्टासम्म आरा (ठूलो करौंती) ले चीरियो र फलामको काईयोंद्वारा उनको मासु खुर्कियो, तर यो अत्याचार र यातनाहरू पनि उनीहरूलाई आफ्नो धर्मबाट फेर्न सकेन । पछि भन्नुभयो, “अल्लाहको कसम ! अल्लाह तआ़ला यस कुरोलाई पूर्ण (अर्थात इस्लाम़लाई विजयी गर्नेछ ।) यहाँसम्मकि एक सवार सन्आदेखि (यमनको राजधानी हो) । हज़रमूतसम्म एक्लै यात्रा गर्नेछ र उसलाई अल्लाहको अतिरिक्त कसैको भय हुनेछैन ।” (अल-हदीस सहीह बुख़ारी) संख्या ६९४३, किताव अल-इकराह) तात्पर्य नवी सल्लल्लाहु अलैहि वसल्लमबाट मुसलमानहरूमा साहस र स्थायित्व र शौर्य उत्पन्न गर्नु थियो ।

[1]यसकारण कि كُلُّ مَا هُوَ آتٍ فَهُوَ قَرِيْبٌ (हर आउने वस्तु निकट छ) र ईमानवालाहरूको लागि अल्लाहको सहायता निश्चित छ, यसकारण त्यो निकट नै छ ।

[2]केही सहावाहरूद्वारा प्रश्न गरेको कारण धन व्यय गर्नको लागि त्यसका प्राथमिक पात्रहरूको वर्णन गरिँदैछ । अर्थात् यी सबैभन्दा अधिक तिम्रा धनरुपी सहायताका अधिकारी हुन् । यसबाट ज्ञात भयो कि मालको यो आदेश स्वेच्छात्मक दानसँग सम्बन्धित छ, ज़कातसित सम्बन्धित होइन, किनभने माता-पितामाथि ज़कातको धन खर्च गर्नु उचित छैन । आदरणीय मैमून् बिन मेहरानले यस आयतको तिलावत (कुर्आन पढ्नु) गरी भन्नुभयो माल खर्च गरिने यी स्थानहरूमा न तवला सारङ्गीको वर्णन छ र नराम्रा चित्रहरु र भित्तामा झुण्ड्याइने मनमोहक पर्दाहरूको वर्णन छ । भावार्थ यो हो कि यी कुराहरूमाथि माल खर्च गर्नु अल्लाहलाई रुचिकर छैन र व्यर्थ छ । अफसोच कि आज यी व्यर्थका खर्च र अल्लाहलाई मन नपर्ने खर्च हाम्रो जीवनको यसप्रकार एउटा आवश्यक अङ्ग बनिहालेका छन् कि यसलाई गर्न हामीलाई अलिकति पनि नराम्रो लाग्दैन ।

كُتِبَ عَلَيْكُمُ الْقِتَالُ وَهُوَ كُرْهٌ لَّكُمْ ۚ وَعَسَىٰ أَن تَكْرَهُوا شَيْئًا وَهُوَ خَيْرٌ لَّكُمْ ۖ وَعَسَىٰ أَن تُحِبُّوا شَيْئًا وَهُوَ شَرٌّ لَّكُمْ ۗ وَاللَّهُ يَعْلَمُ وَأَنتُمْ لَا تَعْلَمُونَ ﴿٢١٦﴾

(२१६) तिमीलाई धर्म-युद्ध (ज़िहाद) अनिवार्य गरियो यद्यपि कि त्यो तिमीलाई कठिन प्रतीत हुन्छ, हुनसक्छ कि तिमी कुनै कुरालाई नराम्रो ठान्दछौ र वास्तवमा त्यही तिम्रो लागि राम्रो होस् र यो पनि हुनसक्छ कि तिमी कुनै कुरालाई राम्रो ठान्दछौ, र त्यो तिम्रो लागि नराम्रो होस् । वास्तविक ज्ञान अल्लाहलाई नै छ, तिमी मात्र अन्जान (अनभिज्ञ) हौ ।[1]

يَسْأَلُونَكَ عَنِ الشَّهْرِ الْحَرَامِ قِتَالٍ فِيهِ ۖ قُلْ قِتَالٌ فِيهِ كَبِيرٌ ۖ وَصَدٌّ عَن سَبِيلِ اللَّهِ وَكُفْرٌ بِهِ وَالْمَسْجِدِ الْحَرَامِ وَإِخْرَاجُ أَهْلِهِ مِنْهُ أَكْبَرُ عِندَ اللَّهِ ۚ وَالْفِتْنَةُ أَكْبَرُ مِنَ الْقَتْلِ ۗ وَلَا يَزَالُونَ يُقَاتِلُونَكُمْ حَتَّىٰ يَرُدُّوكُمْ عَن

(२१७) मानिसहरू तपाईंसित हुरमतवाला (आदरणीय) महिनाहरूमा युद्धको विषयमा प्रश्न गर्दछन्, तपाई भनिदिनुस् तिनमा युद्ध गर्नु महापाप हो । तर अल्लाहको मार्गबाट रोक्नु उसित कुफ्र गर्नु र मस्जिदे हरामबाट रोक्नु, एवं त्यहाँका निवासीहरूलाई त्यहाँबाट निकाल्नु अल्लाहका निकट त्यसभन्दा पनि ठूलो पाप हो ।[2] र फितना (उपद्रव) हत्याभन्दा पनि ठूलो पाप हो ।[2] यिनीहरू तिमीसित लडाई-झगडा गरी नै राख्नेछन् ।

[1]धर्मयुद्ध (ज़िहाद) को आदेशलाई एउटा उदाहरण दिएर ईमानवालाहरूलाई बुझाइँदैछ कि अल्लाह तआलाको प्रत्येक आदेशानुसार कर्म गर चाहे तिमीलाई कठिन र नराम्रो लागोस् यसकारण कि त्यसको परिणाम र फलबारे तिमी जान्दैनौ, मात्र अल्लाह तआला नै जान्दछ । हुनसक्छ यसमा तिम्रो लागि हित होस् । जस्तै धर्मयुद्ध (जिहाद) को प्रतिफलमा तिमीलाई विजय र सम्मान र माल आदि सबै प्राप्त हुनसक्छ । यसैप्रकार जसलाई तिमी रुचाउँछौ, धर्म-युद्धको सट्टामा घरैमा बसिरहनु, त्यसको परिणाम तिम्रो निम्ति भयानक हुनसक्छ, अर्थात् शत्रुलाई तिमीमाथि विजय प्राप्त हुनसक्दछ र तिमीलाई अपमान एवं अनादरको सामना गर्न परोस् ।

[2]रजब 'जुलक़ादा', 'जिलहिज्जा' र 'मुहर्रम' यी चार महिना अज्ञानकालमा पनि आदरणीय महिनाहरु मानिन्थे, जसमा हत्या र युद्ध गर्न राम्रो ठानिदैनथ्यो । इस्लामले पनि यिनका आदरलाई त्यसैप्रकार गरेको छ । नबी सल्लल्लाहु अलैहि वसल्लमको समयमा मुसलमान सैनिक समूहद्वारा रजबको महिनामा एउटा क़ाफिरको हत्या भयो र केही काफ़िरहरु बन्दी बनाइए ।

دِينِكُمْ إِنِ اسْتَطَاعُوا ۚ وَمَن يَرْتَدِدْ مِنكُمْ عَن دِينِهِ فَيَمُتْ وَهُوَ كَافِرٌ فَأُولَٰئِكَ حَبِطَتْ أَعْمَالُهُمْ فِي الدُّنْيَا وَالْآخِرَةِ ۖ وَأُولَٰئِكَ أَصْحَابُ النَّارِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٢١٧﴾

यहाँसम्मकि यदि उनीबाट सम्भव भए तिमीलाई तिम्रो धर्मबाट विमुख गरिदिन्छन् ।[1] र तिमीमध्ये जुन व्यक्तिहरु आफ्नो धर्मबाट विमुख हुन्छन् र त्यसै अधर्मको स्थितिमा मर्छन् उनको कर्मलोक एवं परलोकका कर्म सबै नष्ट हुनेछन् । यी मानिसहरु नरकवासी हुनेछन् र सधैं नरकमा नै रहनेछन् ।[2]

إِنَّ الَّذِينَ آمَنُوا وَالَّذِينَ هَاجَرُوا وَجَاهَدُوا فِي سَبِيلِ اللَّهِ

(२१८) हो जसले विश्वास गरे तथा प्रवास गरे एवं अल्लाहको मार्गमा जिहाद गरे (धर्मको रक्षाको लागि अल्लाहको मार्गमा युद्ध गरे)

मुसलमानहरूलाई यो थाहा थिएन कि रजबको महिना प्रारम्भ भइहालेको छ । काफ़िरहरूले मुसलमानहरूलाई दोष लगाउँदै भने कि हेर यिनीहरू आदरणीय महिनाहरूलाई पनि आदर गर्दैनन्, जसपश्चात यो आयत अवतरित भयो कि निःसन्देह सम्मानित महिनाहरूमा हत्या गर्नु महापाप हो, तर आदरको दुहाई दिनेवालालाई आफ्ना कर्म देखिंदैनन् ? यी स्वयं त्यसभन्दा पनि ठूलो अपराध गर्दछन् कि अल्लाहको मार्गबाट तथा मस्जिद-ए-हराम (ख़ाना-ए-क़ाबा) बाट मानिसहरूलाई रोक्दछन् र त्यहाँबाट मुसलमानहरूलाई निस्कन उनीहरूले बाध्य गरे । यसको अतिरिक्त अधर्म र शिर्क स्वयं हत्याभन्दा पनि ठूलो पाप हो, यसैकारण मुसलमानहरुबाट गल्तीले आदरका महिनाहरुमा एकाध हत्या पनि भइहाल्यो, त के भयो ? त्यसमाथि कोलाहलको सट्टा आफ्ना कुकर्महरूलाई पनि हेर्नुपर्छ ।

[1]जब यिनी आफ्ना चाल र षड्यन्त्रहरू र तिमीलाई मूर्तद्द (इस्लाम धर्मबाट विमुख हुनेवाला) बनाउने प्रयत्नबाट रुक्नेवाला छैनन् भने तिमी उनीसित सामना गर्न आदरणीय महिनाका कारण किन रोकिइरहन्छौ ?

[2]जो इस्लाम धर्मबाट विमुख हुन्छ अर्थात् मूर्तद्द हुन्छ (यदि त्यो क्षमा माँग्दैन, भने त्यसको सांसारिक दण्ड हत्या छ, हदीसमा छ مَنْ بَدَّلَ دِينَهُ فَاقْتُلُوهُ (सहीह बुख़ारी हदीस ३०१७, किताबुल जिहाद) यस आयतमा त्यसको परलोकका दण्डहरूको वर्णन छ, जसबाट ज्ञात भयो कि ईमानको स्थितिमा गरिएका पुण्यको कर्म पनि अविश्वास र इस्लामबाट विमुख भएपछि नष्ट हुनेछ र जुन प्रकारले ईमान स्वीकार गरेपछि विगतका पापहरू समाप्त हुन्छन्, त्यसैप्रकार अधर्म र इस्लामबाट विमुख भएको स्थितिमा सारा पुण्य निष्फल हुन्छन्, तैपनि कुरआनका शब्दहरूबाट यो स्पष्ट हुन्छ कि कर्महरूलाई नष्ट त्यसै बेला गरिनेछ जब मृत्यु कुफ्रको स्थितिमा हुन्छ, यदि मृत्युबाट पहिले नै क्षमा माँगिहाल्यो भने यस्तो हुनेछैन अर्थात् मूर्तद्दको क्षमा स्वीकार्य छ ।

أُولَٰئِكَ يَرْجُونَ رَحْمَتَ اللَّهِ ۚ وَاللَّهُ غَفُورٌ رَّحِيمٌ ﴿٢١٨﴾

ती नै अल्लाहको दयाको आशा राख्दछन् । र अल्लाह (तआ़ला) अति क्षमाशील एवं अति कृपालु छ ।

يَسْأَلُونَكَ عَنِ الْخَمْرِ وَالْمَيْسِرِ ۖ قُلْ فِيهِمَا إِثْمٌ كَبِيرٌ وَمَنَافِعُ لِلنَّاسِ وَإِثْمُهُمَا أَكْبَرُ مِن نَّفْعِهِمَا ۗ وَيَسْأَلُونَكَ مَاذَا يُنفِقُونَ قُلِ الْعَفْوَ ۗ كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ لَكُمُ الْآيَاتِ لَعَلَّكُمْ تَتَفَكَّرُونَ ﴿٢١٩﴾

(२१९) मानिसहरू तपाईंसँग मदिरा र जुवाको विषयमा प्रश्न गर्दछन्, तपाईं भनिदिनुस् यी दुबैमा महापाप छ ।[१] र मानिसहरूलाई यसबाट सांसारिक लाभ पनि हुन्छ, तर तिनको पाप तिनको लाभभन्दा अति धेरै छ ।[२] तपाईंसित यो पनि सोध्छन् कि कति खर्च गरौं, तपाईं भनिदिनुस् आवश्यकताभन्दा अधिकलाई ।[३] अल्लाह (तआ़ला)

[१]महापाप त धर्म अनुसार छ ।

[२]लाभको सम्बन्ध संसारसित छ । जस्तै मदिरापानले सामयिकरुपले स्फूर्ति र केही बुद्धिहरूमा तीब्रता आउँछ, कामवेग बढ्दछ, जसको लागि त्यसको प्रयोग सामान्य रूपले हुन्छ । यसैप्रकार यसको क्रय-विक्रय पनि लाभप्रद व्यापार हो । जुवाबाट पनि मानिस एकाधपटक जित्छ र केही माल उसको हातमा आउँछ तर यी लाभ ती हानिहरूको अपेक्षा नगण्य हुन्छन्, जुन व्यक्तिको बुद्धि र त्यसको धर्मलाई यी कुराबाट पुग्छन् । यसैले आदेश गर्‍यो, "तिनका पाप, तिनका लाभभन्दा निकै ठूलो छ ।" यसप्रकार यस आयतमा मदिरा र जुवालाई निषेध गरिएको छैन तैपनि यसको लागि पृष्ठभूमि तयार गरिएको छ । यस आयतबाट यो पनि ज्ञात भयो कि हरेक कुरोमा चाहे जति नराम्रोपना किन नहोस्, केही न केही त लाभ अवश्य हुनेछ । जस्तै रेडियो टि. भी. र अन्य यसैप्रकारका आधुनिक आविष्कारहरूका केही लाभ बताएर मानिसहरूले स्वयं आफूलाई धोखा दिइराखेका छन् । हेर्नु यो छ कि लाभ-हानिको अनुपात के छ ? विशेषरुपले धर्म, ईमान, स्वभाव एवं चरित्रको लागि यदि धार्मिक हानिहरू धेरै छन् भने अलिकति सांसारिक लाभको लागि त्यसलाई उचित गर्न सकिदैंन ।

[३]यस अर्थ अनुसार यो नैतिक मार्गदर्शन हो अथवा यो आदेश इस्लामको प्रारम्भिक समयमा दिइएको छ, जसमा ज़कात अनिवार्य भए पश्चात कर्म गर्नु आवश्यक रहेन, तर श्रेष्ठ अवश्य छ अथवा यसका अर्थ छन् ما سهل وتيسّر ولم يشق على القلب (फ़तहुल क़दीर) "जुन सरलता एवं सजिलोसँग हुन्छ र हृदयमाथि बोझ नलागोस् ।" इस्लाम धर्मले निःसन्देह धन दान गर्ने कुरोमा जोड दिएको छ तर यसमा ध्यान रहोस् कि आफ्नो संरक्षणमा रहने मानिसहरूको आवश्यकता एवं संरक्षणमा कुनै प्रकारको कमी नआओस् तथा उनीलाई प्राथमिकता दिन आदेश

यसैप्रकार आफ्ना आदेश स्पष्टरुपले तिम्रो निम्ति वर्णित गरिराखेको छ ताकि तिमी सोच्न-बुझ्न सक ।

(२२०) सांसारिक र धार्मिक कर्महरूबारे, र अनाथहरूको विषयमा पनि तपाईंसित प्रश्न गर्दछन् ।[1] तपाईं भनिदिनुस् कि उनीहरूको हित गर्नु नै राम्रो हो, तिमी यदि आफ्नो माल उनीहरूको मालमा मिसाइ पनि हाल्छौ भने उनी तिम्रा भाइ हुन्, कुविचार र सुविचार प्रत्येकलाई अल्लाह पूर्णरुपले जान्दछ, र यदि अल्लाहले चाहेको भए तिमीलाई कठिनाईमा पार्नसक्थ्यो ।[2] निः संदेह अल्लाह (तआला) सर्वशक्तिशाली, तत्वज्ञानी छ ।

فِى الدُّنْيَا وَالْآخِرَةِ ۗ وَيَسْـَٔلُونَكَ عَنِ الْيَتَٰمَىٰ ۖ قُلْ إِصْلَاحٌ لَّهُمْ خَيْرٌ ۖ وَإِن تُخَالِطُوهُمْ فَإِخْوَٰنُكُمْ ۚ وَاللَّهُ يَعْلَمُ الْمُفْسِدَ مِنَ الْمُصْلِحِ ۚ وَلَوْ شَآءَ اللَّهُ لَأَعْنَتَكُمْ ۚ إِنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ﴿٢٢٠﴾

(२२१) र मुश्रिक (बहुईश्वरवादी) स्त्रीहरूसँग त्यसबेलासम्म विवाह नगर जबसम्मकि तिनीहरू ईमान स्थापित गर्दैनन् ।[3] ईमान भएकि दासी

وَلَا تَنكِحُوا الْمُشْرِكَٰتِ حَتَّىٰ يُؤْمِنَّ ۚ وَلَأَمَةٌ مُّؤْمِنَةٌ خَيْرٌ مِّن مُّشْرِكَةٍ وَلَوْ أَعْجَبَتْكُمْ ۗ

आएको छ । अर्को यसप्रकार खर्च गर्नबाट मनाही गरिएको छ कि भोलि तिम्रा परिवारवालाहरूलाई अरुहरूको अगाडी हात फैलाउन परोस् ।

[1] जब अनाथहरूको माल अत्याचार गरी खानेवालाहरूको लागि कठोर दण्डको आदेश आयो तब सहावा तर्सिहाले र अनाथहरूको हरेक कुरा अलग गरिदिए यहाँसम्मकि खाने-पिउने कुरा अलग्ग गरिदिए, यदि उनीहरूको खाने-पिउने कुरो बच्थ्यो भने त्यसलाई उपयोगमा ल्याउँदैनथे, जसले गर्दा त्यो कुरो खराब भइहाल्थ्यो, यस भयले कि कहीं यस दण्डका अधिकारी नवनुन्, यसमाथि यो आयत अवतरित भयो । (इब्ने कसीर)

[2] अर्थात् त्रुटि हटाउन तथा भलोको निम्ति पनि, तिनीहरूका माललाई आफ्नो मालमा मिसाउने आज्ञा प्रदान गर्दैन ।

[3] मुश्रिक स्त्रीहरूबाट तात्पर्य मूर्तिपूजक अथवा बहुईश्वरवादी स्त्रीहरू हुन्, किनभने किताववाला (यहूदी र ईसाई) स्त्रीहरूसित विवाह गर्ने आज्ञा कुरआनले प्रदान गरेको छ, तर कुनै मुसलमान स्त्रीको विवाह अहले किताव पुरुषहरूसित हुनसक्दैन । तैपनि आदरणीय उमर रज़ी अल्लाह अन्हुले कारणवश यहूदी स्त्रीसित विवाह गर्नु राम्रो मान्नु भएको छैन । (इब्ने कसीर)

وَلَا تُنكِحُوا الْمُشْرِكِينَ حَتَّىٰ يُؤْمِنُوا ۚ وَلَعَبْدٌ مُّؤْمِنٌ خَيْرٌ مِّن مُّشْرِكٍ وَلَوْ أَعْجَبَكُمْ ۗ أُولَٰئِكَ يَدْعُونَ إِلَى النَّارِ ۖ وَاللَّهُ يَدْعُو إِلَى الْجَنَّةِ وَالْمَغْفِرَةِ بِإِذْنِهِ ۖ وَيُبَيِّنُ آيَاتِهِ لِلنَّاسِ لَعَلَّهُمْ يَتَذَكَّرُونَ ﴿٢٢١﴾

पनि मुश्रिक (बहुईश्वरवादी) स्वतन्त्र स्त्रीभन्दा श्रेष्ठ छ, यद्यपि तिमीलाई मुश्रिक (बहुईश्वरवादी) नै राम्रो लागोस् र न मुश्रिक (बहुईश्वरवादी) पुरुषहरूलाई आफ्ना स्त्रीहरूसित विवाह गर्न देउ, जबसम्म त्यो निष्ठावान हुँदैन। (अर्थात् इस्लाम धर्म माथि निष्ठा स्थापित गर्दैनन्) ईमान्दार गुलाम (मुसलमान दास) स्वतन्त्र मुश्रिक (बहुईश्वरवादी) भन्दा श्रेष्ठकर छ, यद्यपि तिमीलाई मुश्रिक (बहुईश्वरवादी) राम्रो लाग्छ। यिनीहरू नरकतिर बोलाउँछन्, र अल्लाह स्वर्गतिर र मोक्षतिर आफ्नो आदेशले बोलाउँछ, त्यो आफ्ना निशानीहरूलाई मानिसहरूका लागि वर्णित गरिराखेको छ, ताकि उनीहरू शिक्षा प्राप्त गरुन्।

وَيَسْأَلُونَكَ عَنِ الْمَحِيضِ ۖ قُلْ هُوَ أَذًى فَاعْتَزِلُوا النِّسَاءَ

(२२२) र तपाईंसित मासिक धर्मको विषयमा सोध्छन्, भनिदिनुस् त्यो फोहोर हो, तसर्थ मासिक धर्मको समयमा स्त्रीहरूबाट अलग्ग रह।[1]

यस आयतमा ईमानवालाहरूलाई ईमान्दार स्त्री-पुरुषमा विवाह गर्ने कुरोमा जोड दिइएको छ। र धर्मलाई एकातिर पन्छ्याई मात्र सुन्दरताको कारण विवाह गर्नलाई परलोकको विनाशताको कारण भनिएको छ। जसरी हदीसमा पनि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "स्त्रीसित चार कारणहरूले विवाह गरिन्छ। माल, जाति, सुन्दरता अथवा धर्मको कारणले, तिमी धार्मिक स्त्रीको चयन गर।" (सहीह बुखारी किताबुन निकाह, बाबुलकफाअ फिद्दीन तथा मुस्लिम किताबुल रिदाआ) यसै प्रकार सुशील स्त्रीलाई संसारको सर्वश्रेष्ठ सम्पत्ति भनिएको छ। «خَيْرُ مَتَاعِ الدُّنْيَا الْمَرْأَةُ الصَّالِحَةُ» (सहीह मुस्लिम, किताबुल रिदाआ)

[1]आफ्नो यौवन अवस्थामा पुगेपछि प्रत्येक स्त्रीलाई जुन मासिक धर्मको रगत आउँछ, त्यसलाई हैज़ भन्दछन् र कैयौं पटक अप्राकृतिक रूपले रोगको कारण जुन रगत आउँछ, त्यसलाई इस्तेहाज़ा भन्दछन्, जसको आदेश र नियम हैज़भन्दा भिन्न छ। हैज़का दिनहरूमा स्त्रीलाई नमाज़ माफ छ र रोज़ा बस्नबाट रोकिएको छ, तर तिनका साटो अरु दिनहरुमा बस्नु अनिवार्य छ। पुरुषको लागि मात्र संभोग प्रक्रियाबाट रोकिएको छ तर चुम्बन अथवा साथमा पल्टनलाई उचित भनिएको छ, यसैप्रकार स्त्री यी दिनहरूमा घरको कार्य एवं खाना पकाउन सक्छे तर

فِي الْمَحِيضِ ۖ وَلَا تَقْرَبُوهُنَّ حَتَّىٰ يَطْهُرْنَ ۖ فَإِذَا تَطَهَّرْنَ فَأْتُوهُنَّ مِنْ حَيْثُ أَمَرَكُمُ اللَّهُ ۚ إِنَّ اللَّهَ يُحِبُّ التَّوَّابِينَ وَيُحِبُّ الْمُتَطَهِّرِينَ ﴿٢٢٢﴾

र जवसम्म तिनीहरू पवित्र हुँदैनन्, तिनको निकट (सम्भोगका लागि) नजाउ, हो जब तिनीहरू पवित्र हुन्छन्,[1] तव उनका निकट जाउ जहाँवाट अल्लाहले तिमीलाई आज्ञा प्रदान गरेको छ।[2] नि: संदेह अल्लाह क्षमा माँग्नेहरूलाई, र पवित्र रहनेहरुलाई रुचाउँछ।

نِسَاؤُكُمْ حَرْثٌ لَّكُمْ فَأْتُوا حَرْثَكُمْ أَنَّىٰ شِئْتُمْ ۖ وَقَدِّمُوا لِأَنفُسِكُمْ ۚ

(२२३) तिम्रा पत्नीहरू तिम्रा खेती हुन्, आफ्ना खेतीमा जुनप्रकार जान चाहन्छौ जाउ।[3]

---

यहूदीहरूमा यस स्थितिमा स्त्रीलाई विल्कुल अपवित्र ठान्थ्यो, त्यससँग भेट्नु तथा यसवाट खाना पकाउनु पनि ठीक ठान्दैनथे। सहावाले यस विषयमा नबी सल्लल्लाहु अलैहि वसल्लमसित सोधे तव यो आयत अवतरित भयो, जसमा मात्र यौनि प्रक्रियावाट रोकिएको छ, अलग रहनु तथा निकट नजानुको अर्थ मात्र यौनि प्रक्रियावाट मनाही गरिएको छ। (इब्ने कसीर आदि)

[1]जव उनी पवित्र हुन्छन्, यसका दुई अर्थ भनिएका छन्, एक त यो हो कि जब रगत रोकिन्छ, त विना स्नान गरिए पनि उनी पवित्र छन्। पुरुषलाई उनीसित यौनि सम्वन्ध गर्नु उचित छ। इब्ने हज़्म तथा केही इमाम यसको पक्षमा छन्। अल्लामा अल्वानीले पनि यसको पुष्टि गर्नुभएको छ। (आदावु ज्जेफाफ पृष्ठ ४७) दोस्रो अर्थ हो रगत बन्द भइहाले पश्चात स्नान गरी पवित्र भईहालन्। यस दोस्रो अर्थ अनुसार रगत बन्द भएपश्चात स्त्री स्नान गरी पवित्र नहुन्जेल उसित संभोग हराम छ। इमाम शौकानीले यसलाई श्रेष्ठ भन्नुभएको छ। (फ़तहुल क़दीर) हाम्रा निकट दुवै नियमानुसार कर्म गर्न सकिन्छ, तर दोस्रो श्रेष्ठ छ।

[2]जहाँवाट आज्ञा प्रदान गरेको छ अर्थात् यौनिहरुसित किनभने हैज़को समयमा यिनैको प्रयोगवाट रोकिएको थियो, र अव पवित्र भएपश्चात जुन आज्ञा प्रदान गरिदैछ, त यसको अर्थ हो त्यसै (यौनिको) आज्ञा न कि कुनै अन्य भाग अथवा अंगसित। यसवाट यो भावार्थ निकालियो कि स्त्रीको मलद्वारको प्रयोग हराम छ जस्तो कि हदीसहरूमा यसको जानकारी दिइएको छ।

[3]यहूदीहरूको विचार थियो कि यदि स्त्रीलाई घोप्टो पारी उनको पछाडिबाट संभोग गरिन्छ भने वच्चा (भिङ्गा) जन्म लिनेछ। यसको खण्डनमा भनिदैछ कि संभोग अगाडीवाट गर (पिठ्यूको वल पल्टाएर अथवा पछाडीवाट घोप्ट्याइ) अथवा कोल्टो पारेर, जुन प्रकार चाहन्छौ उचित छ, तर यो आवश्यक छ कि प्रत्येक स्थितिमा स्त्रीको यौनि नै प्रयोग होस्। केही मानिसहरू यसवाट यो अर्थ लिन्छन् (जुन प्रकार चाहन्छौ) मलद्वार पनि आउँछ यसकारण मलद्वारको प्रयोग पनि उचित छ तर यो विल्कुल गलत छ।

وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّكُمْ مُّلٰقُوْهُ ۭ وَبَشِّرِ الْمُؤْمِنِيْنَ ﴿٢٢٣﴾

र आफ्नो लागि पुण्य अगाडी पठाउ, र अल्लाह (तआ़ला) सित तर्सिराख, र जानिराख कि तिमी उसित भेट्नेवाला छौ, र ईमानवालाहरूलाई शुभ-सन्देश सुनाइदिनुस्।

وَلَا تَجْعَلُوا اللّٰهَ عُرْضَةً لِّاَيْمَانِكُمْ اَنْ تَبَرُّوْا وَتَتَّقُوْا وَتُصْلِحُوْا بَيْنَ النَّاسِ ۭ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿٢٢٤﴾

(२२४) र अल्लाह (तआ़ला) लाई आफ्ना शपथहरूको (यसप्रकार) चिन्ह नबनाउ कि पुण्य कार्य र परहेज़गारी र मानिसहरू बीच त्रुटिहरूलाई हटाउन छाडिदेऊ ।[1] र अल्लाह (तआ़ला) सर्वश्रोता, सर्वज्ञाता छ ।

لَا يُؤَاخِذُكُمُ اللّٰهُ بِاللَّغْوِ فِيْٓ اَيْمَانِكُمْ وَلٰكِنْ يُّؤَاخِذُكُمْ بِمَا كَسَبَتْ قُلُوْبُكُمْ ۭ وَاللّٰهُ غَفُوْرٌ حَلِيْمٌ ﴿٢٢٥﴾

(२२५) अल्लाह तआ़ला तिमीलाई ती शपथहरूका लागि समात्ने छैन, जुन दृढ छैनन् ।[2] हो तिम्रो पकड त्यस कुरामा छ, जुन तिम्रा हृदयको कर्म हो, अल्लाह (तआ़ला) क्षमाशील अत्यन्त सहनशील छ ।

لِلَّذِيْنَ يُؤْلُوْنَ مِنْ نِّسَاۗىِٕهِمْ تَرَبُّصُ اَرْبَعَةِ اَشْهُرٍ ۚ فَاِنْ فَاۗءُوْ

(२२६) जुन मानिसहरू आफ्ना पत्नीहरूसित (नभेट्ने) शपथ खान्छन्, उनको निम्ति चार महिनाको

जबकि कुरआनमा स्त्रीलाई आफ्ना खेती भनिएको छ, त यसको स्पष्ट अर्थ यो हो कि केवल खेतीको प्रयोगको लागि भनिदैछ कि "खेतीहरूमा जुनप्रकार चाहन्छौ जाउ ।" र यो खेती (बच्चा पैदा हुने मार्ग) मात्र स्त्रीको यौनि न कि उसको मलद्वार हो । अन्ततः यो एक अप्राकृतिक यौन सम्बन्ध हो, यस्तो व्यक्तिलाई जो आफ्नो पत्नीसँग गुदामैथुन गर्दछ, त्यसलाई (मलऊन) नराम्रो भनिने व्यक्ति भनिएको छ । (इब्ने कसीर र फ़तहुल क़दीर)

[1]अर्थात् क्रोधमा यस्तो कसम नखाउ कि म अमुक व्यक्तिमाथि उपकार गर्नेछैन, अमक व्यक्तिसँग बोल्ने छैन, अमुक व्यक्तिहरू वीच सन्धि गराउने छैन । यसप्रकारका शपथहरूको विषयमा हदीस शरीफमा आएको छ कि यदि यस प्रकारको शपथ खाई पनि हालेका छौ भने त्यसलाई तोडिदेउ, र शपथको कफ्फार: (शपथ गरे पश्चात यदि तोडिन्छ भने त्यसको दण्ड) तिर (शपथको कफ्फाराको लागि हेर्नुस् अल-माइदा:, आयत ८९)

[2]अर्थात् जुन न सोची सम्झी र बानीको रूपमा होस् तर जानीबुझी शपथ खानु महापाप हो ।

فَإِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ

अवधि छ ।[1] अनि यदि फर्कन्छन् भने, अल्लाह (तआ़ला) क्षमावान्, कृपालु छ ।

وَإِنْ عَزَمُوا الطَّلَاقَ فَإِنَّ اللّٰهَ سَمِيْعٌ عَلِيْمٌ

(२२७) र यदि तलाक़को अठोट गर्दछन् भने अल्लाह (तआ़ला) अति सर्वश्रोता, सर्वज्ञाता छ ।[2]

وَالْمُطَلَّقٰتُ يَتَرَبَّصْنَ بِأَنْفُسِهِنَّ ثَلٰثَةَ قُرُوْٓءٍ وَلَا يَحِلُّ لَهُنَّ

(२२८) तलाक़ प्राप्त स्त्रीहरूले आफूलाई तीन मासिक धर्मसम्म रोकिराखुन् ।[3] तिनीहरूको लागि उचित छैन कि अल्लाहले तिनका गर्भाशयमा

[1] إيلاء को अर्थ कसम खानु हो, यदि कुनै पतिले कसम खाइहाल्छ कि म आफ्नो पत्नीसँग एक महिना अथवा दुई महिना (उदाहरणत:) सम्वन्ध राख्ने छैन अनि शपथको अवधि पूरा गरी कुनै सम्वन्ध स्थापित गर्दछ भने कुनै दण्ड छैन र यदि कसमको अवधि पूर्व हुनुभन्दा अगाडी सम्वन्ध स्थापित गर्दछ भने शपथ तोड्नुको दण्ड तिर्नुपर्ने छ। र यदि चार महिनाको अवधिभन्दा अधिक अथवा विना अवधि कसम खाइएको छ भने उनीहरूका लागि यस आयतमा अवधि निर्धारित गरिएको छ, कि यदि त्यो चार महिना पश्चात यदि चाहन्छ भने सम्बन्ध स्थापित गर्नसक्छ अथवा तिनीहरूलाई तलाक़ (पारपाचुके) दिइहालोस् (त्यसलाई चार महिनाभन्दा अधिक अन्योलमा राख्ने कुराको आज्ञा छैन) पहिलो स्थितिमा त्यसलाई कसम तोड्नको दण्ड भोग्नुपर्नेछ र यदि दुबैमध्ये कुनै स्थिति अपनाउने छैन भने न्यायलयले त्यसलाई दुबैमध्ये कुनै एकलाई अपनाउन प्रतिवन्ध गर्नेछ कि त्यो उससित सम्वन्ध स्थापित गरिहालोस् अथवा तलाक़ दिइहालोस् ताकि स्त्रीमाथि अत्याचार नहोस् । (तफसीर इब्ने क़सीर)

[2] यी शब्दहरूबाट प्रतीत हुन्छ कि चार महिना व्यतीत हुनासाथ स्वयं तलाक भइहाल्दैन। (जस्तो कि केही विद्वानहरूको नियममा छ ) बरु पतिले तलाक़ दिनाले तलाक हुनेछ, जसमाथि त्यसलाई न्यायलयले पनि बाध्य गर्नेछ। जस्तो कि प्रराय: विद्वानहरूको मत छ। (इब्ने क़सीर)

[3] उसवाट तात्पर्य त्यो तलाक़ प्राप्त स्त्री हो, जो गर्भवती छैन् । किनभने गर्भवती स्त्रीको लागि प्रसवको अवधि निर्धारित छ) जसलाई समागमभन्दा पहिले नै तलाक़ भइहालेको छ, त्यो पनि नहोस् (किनभने उसको कुनै इद्दत नै छैन ।) बृद्धा पनि नहोस् जसको मासिक धर्म आउन वन्द भइसकेछ (किनभने) त्यसको इद्दत तीन महीना छ । अर्थात् यस आयतमा उपरोक्त वर्णित स्त्रीहरूका अतिरिक्त समागम प्राप्त स्त्रीहरूको इद्दत वर्णित गरिदैछ। र त्यो तीन मासिक धर्मको छ, यसको अर्थ यो हो कि तीन मासिक धर्म व्यतीत भइहाले पश्चात उनीहरूलाई आफ्नो विवाह अर्कै ठाउँमा गर्ने अधिकार छ । (इब्ने क़सीर व फ़तहुल क़दीर)

أَن يَكْتُمْنَ مَا خَلَقَ اللَّهُ فِي أَرْحَامِهِنَّ إِن كُنَّ يُؤْمِنَّ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ ۚ وَبُعُولَتُهُنَّ أَحَقُّ بِرَدِّهِنَّ فِي ذَٰلِكَ إِنْ أَرَادُوا إِصْلَاحًا ۚ وَلَهُنَّ مِثْلُ الَّذِي عَلَيْهِنَّ بِالْمَعْرُوفِ ۚ وَلِلرِّجَالِ عَلَيْهِنَّ دَرَجَةٌ ۗ وَاللَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٢٢٨﴾

जे पैदा गरको छ त्यसलाई लुकाऊन् ।[१] यदि उनीहरूलाई अल्लाह (तआला) मा र प्रलयको दिनमा ईमान छ । उनका पतिहरूलाई यस अवधिमा उनीहरूलाई फर्काइलग्ने पूर्ण अधिकार छ, यदि उनको विचार सुधारको छ ।[२] स्त्रीहरूका पनि त्यस्तै अधिकार छन, जस्तो उनीमाथि पुरुषहरूको छ, न्यायसगत रुपले ।[३] हो, पुरुषहरूलाई स्त्रीहरूमाथि श्रेष्ठता छ, र अल्लाह (तआला) सर्वोच्च, एवं विधाता छ ।

الطَّلَاقُ مَرَّتَانِ ۖ فَإِمْسَاكٌ

(२२९) यी तलाक् दुई पटक छन्[४] अनि त्यस पश्चात या त

[१]यसवाट मासिक धर्म एवं गर्भ दुबै तात्पर्य छन् । मासिक धर्म नलुकाऊन्, जस्तो कि यो भन्नु कि मलाई तलाक् पश्चात एक अथवा दुई पटक मासिक धर्म भएको छ, जबकि त्यसलाई तीन मासिक धर्म भइसकेका छन्, (त्यसको उद्देश्य पहिलो पतिसँग सम्बन्ध स्थापित गर्नु हो, यदि त्यो सम्वन्ध स्थापित गर्न चाहन्छ) अथवा सम्वन्ध स्थापित गर्न चाहँदैन भने भनिदेओस् कि मलाई तीन मासिक धर्म भइसकेका छन्, जबकि वास्तवमा यस्तो नभएको होस् ताकि पतिको सम्वन्ध स्थापित गर्ने अधिकार सिद्ध हुन नसकोस् । यसैप्रकार गर्भलाई नलुकाऊन् किनभने यसप्रकार अर्को ठाउँमा विवाह गरेको दशामा त्यसको वंशमा मिश्रण हुनेछ । वीर्य त्यो पहिलो पतिको हुनेछ र सम्वन्धित अर्को पतिसित भइहाल्नेछ । यो अति महापाप हो ।

[२]सम्वन्ध स्थापित गर्नाले पतिको उद्देश्य यदि परेशान गर्नु छैन भने पतिलाई "इद्दत" अर्न्तगत सम्वन्ध स्थापित गर्नेपूरा अधिकार छ । स्त्रीको संरक्षकलाई यसमा बाधा पार्ने कुनै अनुमति छैन ।

[३]अर्थात् दुवैका अधिकार एक-अर्कासित मिल्दा-जुल्दा छन् जसलाई पूरा गर्न दुवै धार्मिक नियमहरूवाट प्रतिबन्धित छ । परन्तु पुरुषलाई स्त्रीमाथि श्रेष्ठता प्राकृतिक शक्तिमा, ज़िहाद, (धर्मयुद्ध) को आज्ञामा, सम्पत्तिको विभाजनमा स्त्रीभन्दा पुरुषलाई जाति एवं अधिकारमा तलाक् एवं सम्वन्ध स्थापित गर्ने अधिकार (आदि) मा प्राप्त छ ।

[४]अर्थात् त्यो तलाक जसमा पतिलाई प्रत्यागमनको अधिकार छ, त्यो दुई पटक छ । पहिलो पटक तलाक पश्चात पनि र दोस्रो पटक तलाक् पश्चात पनि पति आफ्नो पत्नीसँग सम्वन्ध पुन: स्थापित गर्नसक्छ । तेस्रो पटक तलाक् दिए पश्चात यो सम्वन्ध स्थापित गर्ने अधिकार छैन । वरु यो सम्वन्ध स्थापित गर्नका लागि अरुले यस्तो महिलासित विवाह गरी जीवन निर्वाह नभएको अवस्थामा तीन तलाक दिए पश्चात वा पतिको मृत्यु भएमा मात्र पहिलो पतिसँग सम्वन्ध स्थापित गर्न सकिन्छ । तर पश्चातापको कुरो के हो भने आज कतिपय पुरुषहरुले "हलाला" (तलाक दिने उद्देश्यले विवाह गरी तलाक दिनु ताकि पहिला पतिले फेरि अर्को चोटि फर्काउन सकोस्) गर्छन् । जो वास्तवमा एक प्रकारको गलत र घृणापूर्ण कुकर्म हो ।

بِمَعْرُوفٍ أَوْ تَسْرِيحٌ بِإِحْسَانٍ ۗ وَلَا يَحِلُّ لَكُمْ أَنْ تَأْخُذُوا مِمَّا آتَيْتُمُوهُنَّ شَيْئًا إِلَّا أَنْ يَخَافَا أَلَّا يُقِيمَا حُدُودَ اللَّهِ ۖ فَإِنْ خِفْتُمْ أَلَّا يُقِيمَا حُدُودَ اللَّهِ فَلَا جُنَاحَ عَلَيْهِمَا فِيمَا افْتَدَتْ بِهِ ۗ تِلْكَ حُدُودُ اللَّهِ فَلَا تَعْتَدُوهَا ۚ وَمَنْ يَتَعَدَّ حُدُودَ اللَّهِ فَأُولَٰئِكَ

उचितरुपले रोक्नुपर्छ।[1] अथवा सद्व्यवहारका साथ छाडिदिनु पर्छ।[2] र तिमीलाई यो उचित छैन कि तिमीले उनीहरूलाई जे दिएका छौ, त्यसबाट केही लिउ, हो यो अर्कै कुरा हो कि दुबैलाई अल्लाहका सीमाहरू स्थापित राख्न सक्नेको कुराको भय छ, यसकारण यदि तिमीलाई भय छ कि यी दुबै अल्लाहका सीमाहरू स्थापित गर्नसक्ने छैनन् भने स्त्रीले स्वतन्त्रता प्राप्त गर्नलाई केही दिइहालोस्, यसमा दुबैमाथि कुनै पाप छैन,[3] यी अल्लाहका

अनाज्ञा कालमा यों तलाक् र सम्वन्ध स्थापित गर्ने अधिकार असीमित थियो, जसबाट स्त्रीहरूमाथि अत्याचार हुन्थे, पति पटक-पटक तलाक् दिई सम्वन्ध स्थापित गर्दथ्यो, यसप्रकार न त्यो राख्दथ्यो र न स्वतन्त्र गर्दथ्यो। अल्लाह तआलाले यस अत्याचारको ढोका बन्द गरिदियो। पहिलो र दोस्रो पटक सोच-विचार गर्न समय दिइन्छ। यदि पहिलो पटकमा सधैंको लागि अलग गरिदिने भए, समाजमा यसबाट उत्पन्न हुने समस्याहरूको अनुमान पनि गर्न सकिन्नथ्यो। यसको अतिरिक्त अल्लाह तआलाले طلقتان (दुई तलाक्) भनेन बरु आदेश गऱ्यो। ﴿الطَّلَاقُ مَرَّتَانِ﴾ (तलाक् दुईपटक), यसबाट यो अर्थ निस्क्यो कि एक समयमा दुई अथवा तीन तलाक दिनु र तिनलाई त्यसैबेला लागू गरिदिनु अल्लाह तआलाको आदेशको विपरीत छ। अल्लाह तआलाको विवेक यस प्रकारको न्याय गर्दछ कि एकपटकको तलाक्पछि (चाहे एक होस् वा कैयौं) र यसप्रकार दोस्रो पटक तलाक् पश्चात (चाहे एक होस् अथवा एकभन्दा बढी) पुरुषलाई सोच्ने-बुझ्ने र शीघ्रता अथवा क्रोधमा गरिएका कार्यलाई सच्याउन समय दिइयोस्। यो तर्क एक बैठकमा तीन तलाक्हरूलाई एक तलाक् मान्नु नै उचित सिद्ध गर्दछ, न कि दुबैलाई एकै समयमा लागू गरी सोच्ने र आफ्ना गल्तीहरूलाई स्वीकार्ने छुटबाट बञ्चित गरिदिने दशामा।

[1]अर्थात् सम्बन्ध स्थापित गरी त्यसलाई राम्ररी बसाल्नु।

[2]अर्थात् तेस्रो पटक तलाक् दिएर।

[3]यसमा 'खुलअ' को वर्णन छ जसअनुसार पत्नी आफ्नो पतिबाट सम्बन्ध विच्छेद गर्न चाहन्छे भने त्यस स्थितिमा पतिलाई अधिकार छ कि त्यो महर फिर्ता लिइहालोस्। पति यदि सम्बन्ध विच्छेद स्वीकार गर्दैन भने न्यायलयले पतिलाई तलाक् दिने आदेश गर्दछ, यदि त्यो त्यसलाई मान्दैन भने न्यायलयले विवाहलाई समाप्त गर्नेछ। अर्थात् यो खुलअ, तलाक्द्वारा पनि हुनसक्छ र विच्छेदद्वारा पनि दुबै स्थितिहरूमा इद्दत एक मासिक धर्म छ। (अबूदाऊद)

هُمُ الظّٰلِمُوْنَ ﴿٢٢٩﴾

का सीमाहरू हुन्, सावधान ! यिनीभन्दा अगाडि नजानु र जो मानिसहरू अल्लाहका सीमाहरूलाई उल्लंघन गर्दछन्, ती अत्याचारी हुन् ।

فَإِنْ طَلَّقَهَا فَلَا تَحِلُّ لَهٗ مِنْۢ بَعْدُ حَتّٰى تَنْكِحَ زَوْجًا غَيْرَهٗ ؕ فَإِنْ طَلَّقَهَا فَلَا جُنَاحَ عَلَيْهِمَآ أَنْ يَّتَرَاجَعَآ إِنْ ظَنَّآ أَنْ يُّقِيْمَا حُدُوْدَ اللّٰهِ ؕ وَتِلْكَ حُدُوْدُ اللّٰهِ يُبَيِّنُهَا لِقَوْمٍ يَّعْلَمُوْنَ ﴿٢٣٠﴾

(२३०) अनि यदि उसलाई (तेस्रो पटक) तलाक़ दिइहालेछ भने अब त्यो त्यसको लागि वैध छैन जबसम्मकि त्यो स्त्रीले अन्य पुरुषसँग बिहे गर्दैन, पछि यदि त्यसले तलाक़ दिन्छ भने, ती दुबैलाई मेल-जोल पुनर्मिलन गर्नमा कुनै पाप छैन,[1] जबकि उनीहरूलाई विश्वास हुन्छ कि अल्लाहका सीमाहरूलाई स्थापित गर्न सक्नेछन्, यी अल्लाह (तआला) का सीमाहरू हुन्, जसलाई त्यसले ज्ञानीहरूका लागि वर्णन गरिराखेको छ ।

وَإِذَا طَلَّقْتُمُ النِّسَآءَ فَبَلَغْنَ أَجَلَهُنَّ فَأَمْسِكُوْهُنَّ بِمَعْرُوْفٍ أَوْ سَرِّحُوْهُنَّ بِمَعْرُوْفٍ ۪ وَلَا تُمْسِكُوْهُنَّ ضِرَارًا لِّتَعْتَدُوْا ۚ

(२३१) र जब तिमी स्त्रीहरूलाई तलाक़ दिन्छौ र तिनीहरू आफ्ना इद्दत् (तीन मासिक धर्मको अवधिलाई भन्दछन्) समाप्त गर्न निकट हुन्छन्, तब उनीहरूलाई राम्रो प्रकारले बसाल अथवा

तिर्मिजी, नसाई, अल-हाकिम र फ़तहुल क़दीर) पत्नीलाई यो अधिकार दिनुको साथ-साथै त्यसलाई यस कुरामाथि विशेष जोड दिइएको छ कि पत्नी बिना कुनै विशेष कारण पतिबाट सम्बन्ध विच्छेद अर्थात् तलाक़को माँग नगरोस् । यदि यस्तो गर्नेछ भने नबी सल्लल्लाहु अलैहि वसल्लमले यस्ता स्त्रीहरूको विषयमा कठोर दण्डको सूचना दिनुभएको छ कि त्यो स्वर्गको सुगन्धसम्म पाउन सक्ने छैन । (इब्ने क़सीर आदि)

[1]यस तलाक़बाट तात्पर्य तेस्रो तलाक़ हो र यस पश्चात पतिलाई न त सम्वन्ध स्थापित गर्ने अधिकार छ र न विवाह गर्ने । अब यो स्त्री कुनै अर्को व्यक्तिसँग विवाह गर्दछ र त्यो (व्यक्ति) आफ्नो इच्छाले तलाक़ दिन्छ अथवा त्यसको मृत्यु हुन्छ, त्यस पश्चात त्यो आफ्नो पहिलो पतिसँग विवाह गर्न सक्दछे । तर हाम्रो देशमा जुन यसप्रकार को "हलाला" गर्ने र गराउने प्रथा छ, नबी सल्लल्लाहु अलैहि वसल्लमले यस्ता "हलाला" गर्ने र गराउनेमाथि धिक्कार गर्नुभएको छ । हलालाको कारण गरिएको विवाह, विवाह हुँदैन, यो व्यभिचार हो । यस विवाहबाट स्त्री आफ्नो पतिको लागि वैध हुनेछैन ।

وَمَن يَفْعَلْ ذَٰلِكَ فَقَدْ ظَلَمَ نَفْسَهُۥ ۚ وَلَا تَتَّخِذُوٓا۟ ءَايَٰتِ ٱللَّهِ هُزُوًا ۚ وَٱذْكُرُوا۟ نِعْمَتَ ٱللَّهِ عَلَيْكُمْ وَمَآ أَنزَلَ عَلَيْكُم مِّنَ ٱلْكِتَٰبِ وَٱلْحِكْمَةِ يَعِظُكُم بِهِۦ ۚ وَٱتَّقُوا۟ ٱللَّهَ وَٱعْلَمُوٓا۟ أَنَّ ٱللَّهَ بِكُلِّ شَىْءٍ عَلِيمٌ ۝٢٣١

न्यायका साथ अलग (विदा) गरिदेउ ।[1] र उनीहरूलाई यातना पुऱ्याउने उद्देश्यले अत्याचार वा निर्दयता गर्नलाई नरोक । जुन व्यक्तिले यस्तो गऱ्यो, त्यसले आफ्नो आत्मामाथि अत्याचार गऱ्यो । तिमी अल्लाहका आदेशहरूलाई उपहास नवनाउ ।[2] र अल्लाहको उपकार जुन तिमीमाथि छ, स्मरण गर र जे-जति किताव र विद्या उसले उतारेको छ, जसले तिमीलाई शिक्षा दिइराखेको छ, त्यसलाई पनि (स्मरण गर) र अल्लाह (तआला) सित तर्सदै गर र याद राख कि अल्लाह (तआला) प्रत्येक वस्तुलाई जान्दछ ।

وَإِذَا طَلَّقْتُمُ ٱلنِّسَآءَ فَبَلَغْنَ أَجَلَهُنَّ فَلَا تَعْضُلُوهُنَّ أَن يَنكِحْنَ أَزْوَٰجَهُنَّ إِذَا تَرَٰضَوْا۟ بَيْنَهُم بِٱلْمَعْرُوفِ ۗ ذَٰلِكَ يُوعَظُ بِهِۦ مَن كَانَ مِنكُمْ يُؤْمِنُ بِٱللَّهِ

(२३२) र जब तिमीहरूले आफ्ना स्त्रीहरूलाई तलाक़ दिन्छौ र उनीहरू आफ्ना इद्दत पूरा गर्दछन्, त उनीहरूलाई उनका पतिहरूसित विवाह गर्नबाट नरोक, जबकि उनीहरू आपसमा नियमानुसार सहमत हुन्छन् ।[3] यो शिक्षा उनीहरूलाई दिइन्छ, तिमीहरूमध्ये जसलाई

---

[1] ﴿ٱلطَّلَٰقُ مَرَّتَانِ﴾ मा भनिएको थियो कि दुई तलाकसम्म सम्वन्ध स्थापित गर्न सकिन्छ। यस आयतमा भनिँदैछ कि सम्वन्ध स्थापित इद्दतभित्र हुनसक्छ, इद्दतको अवधि समाप्त भएपश्चात होइन । यसकारण यो पुनरावृत्ति होइन, जुन प्रकारले स्पष्ट प्रतीत हुन्छ ।

[2] केही मानिसहरू ख्याल-ठट्टामै तलाक़ दिन्थे अथवा विवाह गर्दथे अथवा स्वतन्त्र गरिदिन्थे अनि भन्दथे कि मैले मजाक़ गरेको थिए। अल्लाह तआलाले यसलाई आफ्नो आयतमा उपहास भनेको छ, जसको उद्देश्य यसप्रकारका कर्महरूवाट रोक्नु हो । यसकारण नवी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएकोछ कि उपहासवाट पनि यदि उपरोक्त वर्णित कार्य गर्नेछ भने त्यो वास्तविक मानिने छ । र मज़ाकको तलाक़, विवाह एवं स्वतन्त्रता लागू हुनेछ । (तफ़सीर इब्ने कसीर)

[3] यसमा तलाक़ प्राप्त स्त्रीको विषयमा एउटा तेस्रो आदेश गरिदैछ । त्यो यो हो कि यदि इद्दत समाप्त भए पश्चात (पहिलो अथवा दोस्रो तलाक़ भएपछि) भूतपूर्व पति-पत्नी आफ्ना सहमतिले पुन: निकाह गर्दछन् भने, तिमी उनीहरूलाई नरोक । नवी सल्लल्लाहु अलैहि वसल्लमको समयमा एउटा यस्तो घटना घट्यो र स्त्रीको

وَالْيَوْمِ الْآخِرِ ذَٰلِكُمْ أَزْكَىٰ لَكُمْ وَأَطْهَرُ وَاللَّهُ يَعْلَمُ وَأَنتُمْ لَا تَعْلَمُونَ ﴿٢٣٢﴾

अल्लाह (तआ़ला) मा र प्रलयको दिनमा विश्वास एवं ईमान छ, यसमा तिम्रो राम्रो स्वच्छता एवं पवित्रता छ। र अल्लाह (तआ़ला) जान्दछ, तिमी जान्दैनौ।

وَالْوَالِدَاتُ يُرْضِعْنَ أَوْلَادَهُنَّ حَوْلَيْنِ كَامِلَيْنِ لِمَنْ أَرَادَ أَن يُتِمَّ الرَّضَاعَةَ وَعَلَى الْمَوْلُودِ لَهُ رِزْقُهُنَّ وَكِسْوَتُهُنَّ بِالْمَعْرُوفِ

(२३३) र आमाहरू आफ्ना सन्तानहरूलाई पूरा दुई वर्ष दूध खुवाऊन्, जसको दुध खुवाउने इच्छा पूरा अवधिको छ।[1] र जसका सन्तान हुन्, उनीहरूको कर्तब्य छ कि उनीहरूलाई खान-पिन, लत्ता-कपडा प्रदान गरून् जुन नियमानुसार छ।[2] प्रत्येक व्यक्तिलाई यति

भाइले मनाही गरिदियो, तब यो आयत उवतरित भयो। (सहीह बुख़ारी) यसबाट एउटा त यो कुरो ज्ञात भयो कि स्त्री आफ्नो विवाह स्वयं गर्न सक्दैन, बरु त्यसको संरक्षकको आज्ञा तथा सहमति विवाहको लागि आवश्यक छ, त्यसैले त अल्लाह तआ़लाले संरक्षककहरूलाई आफ्नो संरक्षणको अधिकारको अनुचित प्रयोगबाट रोकेको छ। यसको थप पुष्टि हदीस नबवी सल्लल्लाहु अलैहि वसल्लमबाट हुन्छ لا نكاح إلا بولي (संरक्षकको आज्ञा बिना विवाह छैन।) (अन-निसाई) दोस्रो कुरो यो ज्ञात भयो कि स्त्रीका संरक्षकहरूलाई पनि स्त्रीमाथि अत्याचार गर्ने अधिकार छैन बरु उनीहरूको लागि आवश्यक छ कि स्त्रीको सहमतिको पनि अवश्य कदर गरुन्।

[1]यस आयतमा दूध खुवाउने समस्याको वर्णन छ। यसमा सर्वप्रथम जुन कुरो भनिएको छ, त्यो यो हो कि जो पूर्ण अवधिसम्म दुध खुवाउन चाहन्छन् भने यो अवधि दुई वर्षको छ। यी शब्दहरूबाट यसभन्दा कम अवधिसम्म दुध खुवाउन परविधान निस्कन्छ। दोस्रो कुरो यो हो कि दुध खुवाउने अवधि बढीभन्दा-बढी दुईवर्षको हो। जस्तो तिर्मिजीमा उम्मे सलमाद्वारा वर्णित कथन छ لا يُحَرِّمُ مِنَ الرَّضَاعِ إِلَّا مَا فَتَقَ الأَمْعَاءَ فِي الثَّدْيِ وَكَانَ قَبْلَ الْفِطَامِ (तिर्मिजी, किताबुल रिदाआ), त्यही रिदाआ (दूध खुवाउन) पवित्रता (हुरमत) सिद्ध गर्दछ जुन छातिबाट निस्की आन्द्रालाई च्यात्छ, यो दूध छुटाउनु (को अवधि) भन्दा पहिले होस्। अतः यदि कुनै बच्चा कुनै स्वास्नी मानिसको यसप्रकार दूध पिउनेछ, जसबाट दूध खुवाउन सिद्ध हुन्छ, त उनीहरूका बीचमा दूधको सम्बन्ध स्थापित भइहाल्ने छ, जस पश्चात दूध खाएका भाइ-बहिनीहरूमा विवाह त्यसै प्रकारले हुँदैन जुन प्रकारले भाइ-बहिनीहरूमा वर्जित छ يَحْرُمُ مِنَ الرَّضَاعِ مَا يَحْرُمُ مِنَ النَّسَبِ (सहीह बुख़ारी, किताबुश् शहादत) दूध पिउनाले पनि त्यो सम्बन्ध निषेध भइहाल्नेछ, जुन वंशले अवैध हुन्छन्।

[2] مولوده सित तात्पर्य पिता हो। तलाक़ भएपश्चात नवजात शिशु र त्यसकि आमाको भरण-पोषणको समस्या हाम्रो समाजमा जटिल हुँदै गइराखेको छ।

لَا تُكَلَّفُ نَفْسٌ إِلَّا وُسْعَهَا ۚ لَا تُضَآرَّ وَٰلِدَةٌۢ بِوَلَدِهَا وَلَا مَوْلُودٌ لَّهُۥ بِوَلَدِهِۦ ۚ وَعَلَى ٱلْوَارِثِ مِثْلُ ذَٰلِكَ ۗ فَإِنْ أَرَادَا فِصَالًا عَن تَرَاضٍ مِّنْهُمَا وَتَشَاوُرٍ فَلَا جُنَاحَ عَلَيْهِمَا ۗ وَإِنْ أَرَدتُّمْ أَن تَسْتَرْضِعُوٓا۟ أَوْلَٰدَكُمْ فَلَا جُنَاحَ عَلَيْكُمْ إِذَا سَلَّمْتُم مَّآ ءَاتَيْتُم بِٱلْمَعْرُوفِ ۗ وَٱتَّقُوا۟ ٱللَّهَ وَٱعْلَمُوٓا۟ أَنَّ ٱللَّهَ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٢٣٣﴾

नै कठिनाई (बोझ) दिइन्छ, जति उसको शक्ति छ। आमालाई उसको सन्तानको कारण, अथवा बाबुलाई उसको सन्तानको कारण कुनै हानि नपुऱ्याइयोस् ।[1] उत्तराधिकारीलाई पनि त्यसकै जस्तो कर्तब्य छ ।[2] अनि यदि दुबै (अर्थात् आमा-बाबु) आफ्नो सहमति एवं आफ्ना विचार ले दुई वर्ष अगावै दूध छुटाउन चाहन्छन् भने दुबैमाथि कुनै पाप छैन, र यदि तिमी आफ्ना सन्तानहरूलाई दुध खुवाउन चाहन्छौ भने पनि तिमीलाई कुनै पाप छैन, जबकि तिमी उनीहरूको सांसारिक नियमानुसार, उनीहरूलाई पारिश्रमिक दिन्छौ ।[3] अल्लाह तआलासित तर्सिराख र जानिराख कि अल्लाह (तआला) तिम्रा कर्महरूलाई देखिराखेको छ ।

وَٱلَّذِينَ يُتَوَفَّوْنَ مِنكُمْ وَيَذَرُونَ أَزْوَٰجًا يَتَرَبَّصْنَ

(२३४) यदि तिमीहरू मध्येबाट कसैको मृत्यु हुन्छ र पत्नीहरू छोडेर जान्छन् त ती पत्नीहरू आफूलाई

यसको कारण धार्मिक नियमहरूको अवहेलना हो। यदि अल्लाहको आदेशानुसार पति आफ्नो यथासम्भव तलाक दिइएको स्त्रीको गाँस, लत्ता कपडाको उत्तरदायी छ, जुन प्रकारले यस आयतमा भनिंदैछ, त अति सरलताले समस्याको समाधान हुन्छ ।

[1]आमालाई कष्ट पुऱ्याउनुको तात्पर्य यो हो कि जस्तो माता आफ्नो बच्चाहरूलाई आफ्नो पासमा राख्न चाहन्छे, तर ममतालाई लत्याएर उसको बच्चा उसबाट बलपूर्वक खोसिहालिन्छ अथवा यो कि बिना खर्चको जिम्मेदारी लिई उसलाई दुध खुवाउन बाध्य गरिन्छ । पितालाई कष्ट पुऱ्यानुको तात्पर्य यो हो कि माता दूध पिलाउनबाट इन्कार गरिदिन्छे अथवा उसको शक्तिभन्दा अधिक उसबाट माग गर्दछे ।

[2]पिताको मृत्यु पश्चात यस्तो स्थितिमा यो कर्तब्य उत्तराधिकारीहरूको हो कि उनीहरू बच्चाको आमाको अधिकार उचित रूपले पूरा गरून्, ताकि न त स्त्रीलाई कष्ट होस् र न बच्चाको पालन-पोषणमा प्रभाव परोस् ।

[3]यो आमाको अतिरिक्त अन्य कुनै स्त्रीसित दूध खुवाउने कुराको आज्ञा हो तर उसको देय नियमानुसार गरियोस् ।

بِأَنْفُسِهِنَّ أَرْبَعَةَ أَشْهُرٍ وَعَشْرًا ۖ فَإِذَا بَلَغْنَ أَجَلَهُنَّ فَلَا جُنَاحَ عَلَيْكُمْ فِيمَا فَعَلْنَ فِي أَنْفُسِهِنَّ بِالْمَعْرُوفِ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿٢٣٤﴾

चार महिना र दस (दिन) इद्दतमा राखून् ।[1] अनि जब अवधि समाप्त गर्दछन्, त जे न्यायसँगत रुपमा आफ्नो लागि गर्दछन्, त्यसमा तिमीलाई कुनै पाप छैन ।[2] अल्लाह (तआला) तिम्रा प्रत्येक कर्मलाई जान्दछ ।

وَلَا جُنَاحَ عَلَيْكُمْ فِيمَا عَرَّضْتُمْ بِهِ مِنْ خِطْبَةِ النِّسَاءِ أَوْ أَكْنَنْتُمْ فِي أَنْفُسِكُمْ ۚ عَلِمَ اللَّهُ أَنَّكُمْ سَتَذْكُرُونَهُنَّ وَلَٰكِنْ لَا تُوَاعِدُوهُنَّ سِرًّا إِلَّا أَنْ تَقُولُوا قَوْلًا مَعْرُوفًا ۚ وَلَا تَعْزِمُوا عُقْدَةَ النِّكَاحِ حَتَّىٰ

(२३५) र तिमीलाई यसमा कुनै पाप छैन यदि तिमी संकेतरुप अथवा अस्पष्टरुपले यी स्त्रीहरूसित विवाहको सम्बन्धमा भन्दछौ अथवा आफ्नो हृदयमा इच्छा लुकाउँछौ, अल्लाह (तआला) लाई ज्ञान छ कि तिमी अवश्य उनलाई याद गर्नेछौ तर तिमी उनीसित लुकाएर (वचन) नगर ।[3] हो, यो अर्कै कुरा हो कि

[1]मृत्युको यो इद्दत प्रत्येक पत्नीको लागि छ, पतिले उससित समागम गरेको होस् अथवा नगरेको होस् । गर्भहीन पत्नीको लागि यो नियम छैन किनभने उसको इद्दत प्रसव हुनु हो । ﴿وَأُولَاتُ الْأَحْمَالِ أَجَلُهُنَّ أَنْ يَضَعْنَ حَمْلَهُنَّ﴾ (अल-तलाक़), गर्भवती स्त्रीको अवधि प्रसव हो । यस मृत्युको इद्दतमा स्त्रीलाई सिंगार-पटार (यहाँसम्मकि गाँजल लगाउन पनि) र पतिको घरबाट कुनै अन्य स्थानमा जाने अनुमति छैन । तर प्रत्यागम्य तलाक़-प्राप्त पत्नीको लागि सिंगार-पटार गर्नुमा प्रतिबन्ध छैन, तर विच्छेदनीय तलाक़ प्राप्तिको लागि मतभेद छ, केही उचित र केही अनुचितका पक्षमा छन् । (इब्ने क़सीर)

[2]अर्थात् इद्दत पश्चात सिंगार-पटार गरोस् र आफ्ना संरक्षकहरूको सहमति एवं परामर्शले कुनै अन्यसित विवाहको प्रबन्ध गरोस् त यसमा आपत्तिको कुरो छैन, यसकारण तिमीलाई पनि (हे स्त्रीका संरक्षकहरू) कुनै पाप छैन । यसबाट ज्ञात भयो कि विधवाको दोस्रो विवाहलाई न नराम्रो ठान्नुपर्छ र न त्यसमा कुनै बाधा पुऱ्याउनु पर्छ जस्तो कि हिन्दू धर्मको प्रभावले हाम्रो समाजमा यो कुरो पाइन्छ ।

[3]यो विधवा अथवा त्यो स्त्री जसको तीन पटक तलाक़ भइसकेको छ अर्थात विच्छेदनीय तलाक़ त्यसको विषयमा भनिदैछ कि इद्दतको अवधिमा तिमी उनलाई मंगनीको संकेत दिन सक्छौ (जस्तो मेरो विवाह गर्ने विचार छ, अथवा म सुशील स्त्रीको खोजमा छु आदि) तर उनीसित गुप्तरुपले बचन नलिउ र न इद्दतको अवधि समाप्त भए विना मँगनीको सन्देश देउ । परन्तु त्यो स्त्री जसको पतिले एक अथवा दुई तलाक़ दिएको छ, त उसित कुनै पनि प्रकारले इद्दतको अवधिभित्र विवाहको सन्देश दिनु उचित छैन किनभने

يَبْلُغَ الْكِتٰبُ اَجَلَهٗ ۭ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ يَعْلَمُ مَا فِيْٓ اَنْفُسِكُمْ فَاحْذَرُوْهُ ۚ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ غَفُوْرٌ حَلِيْمٌ ﴿٢٣٥﴾

तिमी राम्रो कुरा बोल्ने गर[1] र जबसम्म इद्दतको अवधि पूरा हुँदैन, विवाहको बन्धन दृढ नगर । जानिराख, अल्लाह (तआ़ला) लाई तिम्रा हृदयका कुराहरूका पनि ज्ञान छ, तिमी उसित तर्सने गर र यो पनि जानिराख कि अल्लाह (तआ़ला) क्षमाशील र कृपानिधान छ ।

لَا جُنَاحَ عَلَيْكُمْ اِنْ طَلَّقْتُمُ النِّسَاۗءَ مَا لَمْ تَمَسُّوْھُنَّ اَوْ تَفْرِضُوْا لَهُنَّ فَرِيْضَةً ښ وَّمَتِّعُوْھُنَّ ۚ عَلَي الْمُوْسِعِ قَدَرُهٗ وَعَلَي الْمُقْتِرِ قَدَرُهٗ ۚ مَتَاعًۢا بِالْمَعْرُوْفِ ۚ حَقًّا عَلَي الْمُحْسِنِيْنَ ﴿٢٣٦﴾

(२३६) यदि तिमी स्त्रीहरूलाई बिना स्पर्श र बिना महर निर्धारित गरी तलाक़ दिन्छौ भने तिमीमाथि कुनै पाप छैन, हो उनीहरूलाई केही न केही लाभ प्रदान गर । धनवान आफ्नो सामर्थ्य अनुसार र निर्धन आफ्नो शक्तिको हिसाबले नियमअनुसार राम्रो लाभ देऊन् । सत्कर्मकहरूका लागि यो अनिवार्य छ ।[2]

जबसम्म इद्दत समाप्त हुँदैन, त्यसमाथि त्यसको पतिको अधिकार छ, हुनसक्छ कि (त्यसको प्रत्यागमन गरिहालोस्) पति त्यससित सम्बन्ध स्थापित गरिहालोस् ।

**समस्या :** कैयौं पटक यस्तो पनि हुन्छ कि अशिक्षित व्यक्तिहरू इद्दतको अवधिमा नै विवाह गरिहाल्छन् । उनको विषयमा यो छ कि यदि उनीहरूमध्ये संभोग भएको छैन भने उनीहरूलाई तुरुन्त अलग्ग गराइयोस्, यदि संभोग भइहालको छ भनेपनि अलग गर्नु आवश्यक छ, यसपछि पुन: उनीहरू बीच (इद्दत समय भए पश्चात) विवाह हुनसक्छ वा होइन ? यसमा मतभेद छ । केही आलिमहरूको मत छ कि अब उनीहरू बीच कहिल्यै विवाह हुन सक्दैन, यिनीहरू एक-अर्काका लागि सधैं हराम (अवैध) छन्, परन्तु अधिकतर आलिम उनीहरू बीच विवाह हुने कुरोको पक्षमा छन् । (तफ़सीर इब्ने क़सीर)

[1]यसबाट पनि त्यही नम्रतापूर्वक इंगित छ जसको आदेश पहिला दिइसकिएको छ । जस्तै म तिमीलाई रुचाउँछु अथवा संरक्षकसित भन्दछे कि यसको विवाहको निर्णय गर्नुभन्दा पूर्व मलाई अवश्य भन्नु आदि हो । (इब्ने क़सीर)

[2]यो त्यस स्त्रीको विषयमा आदेश छ कि विवाहको समय महर (स्त्रीधन) निर्धारित गरिएको थिएन र पति संभोग गर्नुभन्दा पूर्व तलाक़ पनि दिइहाल्छ भने त्यसलाई केही न केही लाभ दिएर बिदा गर । यो लाभ (तलाक़को लाभ) पुरुषको शक्ति अनुसार हुनुपर्छ ।

وَإِنْ طَلَّقْتُمُوهُنَّ مِنْ قَبْلِ أَنْ تَمَسُّوهُنَّ وَقَدْ فَرَضْتُمْ لَهُنَّ فَرِيضَةً فَنِصْفُ مَا فَرَضْتُمْ إِلَّا أَنْ يَعْفُونَ أَوْ يَعْفُوَا الَّذِي بِيَدِهِ عُقْدَةُ النِّكَاحِ وَأَنْ تَعْفُوا أَقْرَبُ لِلتَّقْوَى وَلَا تَنْسَوُا

(२३७) र यदि तिमी स्त्रीहरूलाई स्पर्श गर्नुभन्दा पहिला तलाक दिन्छौ र तिमीले उनको महर पनि निर्धारित गरेका छौ भने निर्धारित महरको आधा (महर) दिइहाल, यो अर्कै कुरा हो कि उनी स्वयं माफ गरिदिन्छन्,[1] अथवा त्यो व्यक्ति माफ गरिदिन्छ, जसको हातमा निकाहको गाँठो छ अर्थात् संरक्षक ।[2] तिमीले माफ

अर्थात् धनवान आफ्नो अनुसार अथवा निर्धन आफ्नो शक्ति अनुसार देओस्, जे होस् राम्रो व्यक्तिको लागि यो आवश्यक छ। यस लाभ (मुतआ) को निर्धारण पनि गरिएको छ, कसैले भन्यो दस, कसैले भन्यो (पाँच सय) दिरहम, कसैले भन्यो एक अथवा केही सूट आदि, तर यो निर्धारण धार्मिक नियमहरूबाट होइन। प्रत्येक व्यक्तिलाई आफ्नो शक्ति अनुसार दिने अधिकार एवं आदेश छ। यसमा पनि मतभेद छ कि यो तलाक़को लाभ प्रत्येक तलाक़ पाउने स्त्रीको लागि छ अथवा विशेषरुपले त्यसै स्त्रीले पाउनेछ, जसको विषयमा यस आयतमा आदेशको वर्णन छ। कुर्आन करीमको केही अन्य आयतहरूबाट यो प्रतीत हुन्छ कि यो हरप्रकारको तलाक़ पाउने स्त्रीको लागि हो। यस मुतआको आदेशमा जुन बुद्धिमता र लाभ छ, त्यसलाई स्पष्ट गर्न आवश्यकता छैन। कटुता, तनाव र मतभेदको कारण जुन तलाक़ हुन्छ, उपकार गर्नु स्त्रीको हृदयलाई खुशी पार्नु, खुल्ला हृदयको प्रदर्शन गर्नु, भविष्यका संभावित कटुताहरूलाई हटाउने अति सुन्दर तरीका हो। परन्तु हाम्रो समाजमा यस उपकार एवं व्यवहारको साटो, तलाक दिइएको स्त्रीलाई यसप्रकार बिदा गरिन्छ कि दुवै परिवारहरूको सम्बन्धहरू सधैंका लागि समाप्त हुन्छन्।

[1]यो दोस्रो स्थिति हो कि संभोगभन्दा पूर्व नै तलाक़ दिइहालियोस् र महर निर्धारित थियो। यसकारण पतिको लागि आवश्यक छ कि आधा महर चुक्ता गरोस्। यसबाहेक यदि स्त्रीले आफ्नो यो अधिकार क्षमा गरिदिन्छे भने यस स्थितिमा पतिलाई केही पनि दिनुपर्ने छैन।

[2]यसबाट तात्पर्य पति हो, किनभने विवाहको गाँठो (यसलाई चुँडाल्नु अथवा स्थापित राख्नु) उसको हातमा छ। यो आधा महर क्षमा गरिदिन्छ अर्थात् तिरिएको महर मध्येबाट आधा महर फिर्ता लिनुको सट्टा आफ्नो यो अधिकार (आधा महर) क्षमा गरिदिन्छ र पूरा महर स्त्रीलाई दिन्छ। यसबाट कृपा र उपकारलाई आपसमा नबिर्सनुमा पनि जोड दिइएको छ तथा महरमा पनि यसै कृपा र उपकारको मार्गमा हिंड्न शिक्षा दिइएको छ।

**टिप्पणी** :केहिले بيده عقدة النكاح बाट स्त्रीको संरक्षक अर्थ लिएको छ, अर्थात् स्त्री क्षमा गरिदेओस् अथवा यसको संरक्षक क्षमा गरिदेओस्। तर यो ठीक छैन। एक त स्त्रीको संरक्षकको हातमा विवाहको गाँठो छैन, दोस्रो महरको

الْفَضْلَ بَيْنَكُمْ إِنَّ اللَّهَ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٢٣٧﴾

गरिदिनु संयमसित अति निकट छ तथा परस्पर परोपकारलाई नबिर्स । नि:सन्देह अल्लाह (तआ़ला) तिम्रा कर्महरूलाई देखिराखेको छ ।

حَافِظُوا عَلَى الصَّلَوَاتِ وَالصَّلَاةِ الْوُسْطَىٰ وَقُومُوا لِلَّهِ قَانِتِينَ ﴿٢٣٨﴾

(२३८) नमाज़हरूको सुरक्षा गर, विशेषगरी मध्यवर्ती नमाज़को ।[1] र अल्लाह (तआ़ला) को लागि नम्रतापूर्वक उभिने गर ।

فَإِنْ خِفْتُمْ فَرِجَالًا أَوْ رُكْبَانًا ۖ فَإِذَا أَمِنتُمْ فَاذْكُرُوا اللَّهَ كَمَا

(२३९) यदि तिमीलाई भय छ भने पैदल नै अथवा सवारीको अवस्थामा नै नमाज पढ र जब शान्ति हुन्छ तब अल्लाह (तआ़ला) को महिमाको वर्णन गर

अधिकार स्त्रीलाई छ, र उसको माल हो । उसलाई क्षमा गर्ने अधिकार उसको संरक्षक होइन । यसकारण त्यही व्याख्या उचित छ, जुन अघि गरिसकिएको छ । (फ़तहुल क़दीर)

**विशेष स्पष्टीकरण :** तलाक़ प्राप्त स्त्रीहरू चार प्रकारका हुन्छन् ।
(१) जसका महर पनि निर्धारित छ, पतिले संभोग पनि गरको छ, उनीहरूलाई पूरा महर दिइने छ, जस्तो कि आयत संख्या २२९ मा यसको विस्तृत विवरण छ ।

(२) जसको महर पनि निर्धारित छैन, र पतिद्वारा संभोग पनि गरिएन, तिनलाई केवल तलाक़को लाभ दिइनेछ ।

(३) जसको महर निर्धारित छ तर संभोग गरिएन, तिनलाई आधा महर दिनु अनिवार्य छ । (यी दुवैको विस्तृत विवरण प्रस्तुत आयतमा छ ।)

(४) संभोग त गरियो तर महर निर्धारित छैन, तिनका लागि समान महर छ । समान महरको अर्थ हो, त्यस स्त्रीको समुदायमा जुन सामान्य प्रचलन छ अथवा उस जस्तो स्त्रीलाई सामान्यरुपले जुन महर निर्धारित गरिन्छ (नैलुल अवतार र औनूल माबूद)

[1]मध्येवर्ती नमाज़सित तात्पर्य अस्र (अपरान्हको) नमाज़ हो, जसलाई यस हदीस रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको आधारमा निर्धारित गरिएको छ, जुन खन्दक युद्धवाला दिन अस्रको नमाज़लाई صلوة وسطى भनिएको छ । (सहीह बुख़ारी किताबुल जिहाद संख्या ४५२२, मुस्लिम ४३७)

عَلَّمَكُم مَّا لَمْ تَكُونُوا تَعْلَمُونَ ﴿٢٣٩﴾

जुनप्रकार कि उसले तिमीलाई त्यस कुराको शिक्षा दिएको छ, जसलाई तिमी जान्दैनथ्यौ ।[1]

وَالَّذِينَ يُتَوَفَّوْنَ مِنكُمْ وَيَذَرُونَ أَزْوَاجًا وَصِيَّةً لِّأَزْوَاجِهِم مَّتَاعًا إِلَى الْحَوْلِ غَيْرَ إِخْرَاجٍ ۚ فَإِنْ خَرَجْنَ فَلَا جُنَاحَ عَلَيْكُمْ فِي مَا فَعَلْنَ فِي أَنفُسِهِنَّ مِن مَّعْرُوفٍ ۗ وَاللَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٢٤٠﴾

(२४०) र जो तिमीमध्ये मर्छन् र पत्नीहरू छाडी जान्छन्, उनीहरूले वसीयत गरेर जाऊन् ताकि तिनीहरूका पत्नीहरू एक वर्षसम्म लाभ प्राप्त गरुन्,[2] उनीहरूलाई कसैले ननिकालोस् र यदि उनी स्वयं निस्केर जान्छन् भने तिमीलाई यसमा कुनै पाप छैन, जुन उनी आफ्नो लागि उचित गर्छन् । अल्लाह (तआला) प्रभावी र तत्वदर्शी छ ।

وَلِلْمُطَلَّقَاتِ مَتَاعٌ بِالْمَعْرُوفِ ۖ حَقًّا عَلَى الْمُتَّقِينَ ﴿٢٤١﴾

(२४१) तलाक़ (पारपाचुके) दिइएका (विवाह विच्छेदित) स्त्रीहरूलाई राम्रो प्रकारले लाभ पुऱ्याउनु सदाचारीहरूको लागि अनिवार्य छ ।[3]

---

[1]अर्थात् शत्रुसित भयको कारण जुनप्रकार पनि संभव हुन्छ, पैदल यात्रा गर्दा सवारीमा बसिराखेको अवस्थामा नमाज़ पढिहाल, तर जब भयको स्थिति समाप्त हुन्छ तब त्यसैप्रकार नमाज़ पढ, जुनप्रकारले सिकाइएको छ ।

[2]यो आयत यद्यपि क्रमानुसार पश्चातको हो तर निरस्त छ यसको निरस्तकारी आयत पहिले आइसकेको छ, जसमा मृत्युको इद्दत (गणना अवधि) चार महिना दस दिन भनिएको छ, यसको अतिरिक्त उत्तराधिकारीको आयत (निर्देश) ले पत्नीको भाग निर्धारित गरिदिएको छ, अत: अब पतिलाई पत्नीको निम्ति वसीयत (उत्तरदान) गर्नुको कुनै आवश्यकता छैन, न आवास तथा न पालनपोषणको ।

[3]यो साधारण आदेश हो जसमा प्रत्येक तलाक प्राप्त नारी सम्मिलित छ । छुट्टिने बेलामा जुन प्रकारको शुभ-व्यवहार एवं सान्त्वनामा जोड दिइएको छ, त्यसका अगणित सामाजिक लाभ छन् । काश मुसलमान यस अति महत्वपूर्ण शिक्षाको पालना गर्ने भए, जसलाई उनीहरूले बिल्कुलै बिर्सिदिएका छन् । आधुनिक (धर्म गुरुहरू) ले متاع र متعوهن सित यो अर्थ निकालेका छन् कि तलाक़ भइसकेका स्त्रीलाई सम्पत्ति मध्येबाट अंश देउ अथवा आजीवन त्यसको पालन पोषण गर । यी दुबै कुरा निराधार हुन् । जुन स्त्रीलाई पुरुषले आफ्नो जीवनबाट नरुचाएको कारणले निकालिदियो, त्यो त्यसलाई आजीवन पोषणलाई कुन प्रकारले तिर्न तयार हुनेछ ।

كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمْ اٰيٰتِهٖ لَعَلَّكُمْ تَعْقِلُوْنَ ﴿٢٤٢﴾

(२४२) यसैप्रकार अल्लाह तिम्रो लागि आफ्ना आयतहरू (आदेशहरू) को वर्णन गर्दछ ताकि तिमीहरू वुझ्नसक ।

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ خَرَجُوْا مِنْ دِيَارِهِمْ وَهُمْ اُلُوْفٌ حَذَرَ الْمَوْتِ ۠ فَقَالَ لَهُمُ اللّٰهُ مُوْتُوْا ۟ ثُمَّ اَحْيَاهُمْ ؕ اِنَّ اللّٰهَ لَذُوْ فَضْلٍ عَلَى النَّاسِ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَشْكُرُوْنَ ﴿٢٤٣﴾

(२४३) के तिमीले उनीहरूलाई देखेनौं जो हजारौंको संख्यामा मृत्युको भयको कारण आफ्ना घरहरुवाट निस्केर गए, अल्लाहले उनीहरूसित भन्यो "मर" त्यसपछि उनीहरूलाई जीवित पारिदियो ।[1] नि:सन्देह अल्लाह मानिसहरूमाथि अति कृपालु छ किन्तु प्राय मानिसहरू कृतज्ञता प्रकट गर्दैनन् ।

وَقَاتِلُوْا فِيْ سَبِيْلِ اللّٰهِ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ سَمِيْعٌ عَلِيْمٌ ﴿٢٤٤﴾

(२४४) तथा अल्लाहको मार्गमा युद्ध गर तथा यो जानिराख कि अल्लाह सर्वश्रोता, सर्वज्ञाता छ ।

مَنْ ذَا الَّذِيْ يُقْرِضُ اللّٰهَ قَرْضًا حَسَنًا فَيُضٰعِفَهٗ لَهٗٓ اَضْعَافًا

(२४५) कसले अल्लाहलाई उत्तम ऋण दिनेछ,[2] जसलाई त्यो फेरि कैयन् गुना प्रदान

[1]यो घटना कुनै विगत समुदायको हो, जसको विवरण कुनै हदीसमा पाइँदैन । भाष्यकारहरूका अनुसार यसलाई इस्राईलका पुत्रहरूको समयको घटना र पैग़म्वर को नाम, जसको प्रार्थनाले उनीहरूलाई जीवित गर्‍यो, "हिजक़ील" भनिएको छ । यिनीहरू जिहादमा हत्याको भयले अथवा प्लेगको महामारीको भयले आफ्ना घरहरूवाट निस्कि भागेका थिए, ताकि मृत्युवाट वचिहालून् । अल्लाह तआ़लाले उनीहरूलाई मारेर यो सिद्ध गरिदियो कि तिमी अल्लाहको पकडवाट वच्न सक्दैनौं, दोस्रो कुरो यो कि मनुष्यहरूको अन्तिम शरणागार अल्लाह तआ़लातिर छ, तेस्रो यो कुरा कि अल्लाह तआ़ला पुनर्जीवित गर्न सामर्थ्य राख्दछ र त्यो यसैप्रकार पुन: सवै मनुष्यहरूलाई जीवित गर्नेछ, जुनप्रकार अल्लाह तआ़लाले मारेर उनीहरूलाई पुन: जीवित गर्‍यो । अर्को आयतमा मुसलमानहरूलाई धर्मयुद्धको आदेश दिइँदैछ, यसभन्दा पहिला यस आयतमा यस घटनाको विवरण गर्नुको यो वुद्धिमत्ता हो कि धर्मयुद्धवाट नभाग किनभने मृत्यु र जीवन अल्लाहको अधिकारमा छ र त्यसको समय पनि निर्धारित छ, जसलाई धर्मयुद्धवाट मुख फर्काए पनि तिमी टार्न सक्दैनौं ।

[2]राम्रो उधारवाट तात्पर्य अल्लाहको मार्गमा तथा धर्मयुद्धमा धन दान गर्नु हो, अर्थात् प्रणको जस्तै धन दिनुमा पनि संकोच नगर । धनमा वढोत्तरी एवं कमी पनि अल्लाहकै अधिकारमा छ ।

كَثِيْرَةً ۭ وَاللّٰهُ يَقْبِضُ وَيَبْصُۜطُ ۠ وَاِلَيْهِ تُرْجَعُوْنَ ۝

गर्नेछ तथा अल्लाह नै कमी एवं बढोत्तरी गर्दछ तथा तिमी उसैतिर पुन: जानेछौ ।

اَلَمْ تَرَ اِلَى الْمَلَاِ مِنْۢ بَنِيْٓ اِسْرَاۗءِيْلَ مِنْۢ بَعْدِ مُوْسٰى ۘ اِذْ قَالُوْا لِنَبِيٍّ لَّهُمُ ابْعَثْ لَنَا مَلِكًا نُّقَاتِلْ

(२४६) (हे मुहम्मद !) के तपाईंले इस्राईलको वंशको, "मूसा" पश्चातका समुदायहरूलाई देख्नु भएन[1] जब उनीहरूले आफ्नो नबी (ईशदूत) सित भनें कि हाम्रो एउटा राजा बनाइदिनुस्[2] ताकि

र दुबै प्रकारले तिम्रो परीक्षा लिन्छ, कहिले धनमा बढोत्तरी गरेर र कहिले धनमा कमी गरेर । अल्लाहको मार्गमा खर्च गर्नाले कमी पनि हुँदैन, अल्लाह तआला यसमा कैयन् गुना बढोत्तरी गर्दछ । कहिले प्रत्यक्षरुपले कहिले आन्तरिक एवं आध्यात्मिक रुपले तथा परलोकमा त निश्चय त्यसमा अधिकता आश्चर्यजनक हुनेछ ।

[1] مَلَأ कुनै समुदायमा ती सम्मानित व्यक्ति, सरदार र सरपञ्चहरूलाई भनिन्छ, जो विशेष सल्लाहाकार एवं दूत हुन्छन्, जसलाई हेर्नाले आँखा र हृदय प्रभावित हुन्छन् । مَلَأ को शाब्दिक अर्थ भर्नु हो। (ऐसरुत्तफासीर) जुन पैग़म्बरको वर्णन यहाँ छ त्यसलाई शमुऐल भनिएको छ। इब्ने क़सीर आदि ब्याख्याकारहरूले जुन घटनाको वर्णन गरेका छन्, त्यसको सारांश यो हो कि इसाईको सन्तान आदरणीय मूसा पश्चात केही समयसम्म त ठीक रहे, पछि उनीहरू मार्ग-विचलित भइहाले, धर्ममा नयाँ-नयाँ कुराहरूलाई प्रवृष्ट गर्नथाले यहाँसम्मकि मूर्तिपूजा प्रारम्भ गरिदिए। नबीहरूले उनलाई रोके तर यिनीहरू पाप र मूर्तिपूजाबाट रोकिएनन् । यसको परिणामस्वरुप तिनका शत्रुलाई तिनीहरूमाथि आसीन गरिदियो, जसले उनीहरूका क्षेत्र पनि खोसिहाले र उनको ठूलो संख्यालाई बन्दी पनि बनाए, यिनीहरूमा नबीहरूको श्रृङ्खला पनि समाप्त भयो, अन्ततः केही मानिसहरूको प्रार्थनाले शमुऐल पैदा भए, जसले धर्मको आमन्त्रण एवं प्रचारको कार्य प्रारम्भ गरे । उनीहरूले पैग़म्बरसित माँग गरे कि हाम्रा निम्ति एउटा राजा पदासीन गरिदेउ, जसको नेतृत्वमा हामी आफ्ना शत्रुसित युद्ध गरौं । पैग़म्बरले तिनको भूतका कर्महरुका आधारमा भने कि तिमी माग त गरिराखेका छौ, तर मेरो अनुमान छ कि तिमी आफ्नो कुरामा अटल रहने छैनौं, अत: यस्तै नै भयो, जस्तो कि कुरआनमा वर्णन छ ।

[2] ईशदूतको उपस्थितिमा राजा पदासीन गर्ने माँग राज्य उचित हुने कुराको प्रमाण हो, किनभने यदि राज शासन उचित नभएको भए अल्लाह तआला यस माँगलाई रद्द गरिदिन्थ्यो । तैपनि तिनका लागि तालुतलाई राजा पदासीन गर्‍यो जस्तो कि आउने आयतमा छ ।

فِيْ سَبِيْلِ اللّٰهِ ۗ قَالَ هَلْ عَسَيْتُمْ اِنْ كُتِبَ عَلَيْكُمُ الْقِتَالُ اَلَّا تُقَاتِلُوْا ۗ قَالُوْا وَمَا لَنَآ اَلَّا نُقَاتِلَ فِيْ سَبِيْلِ اللّٰهِ وَقَدْ اُخْرِجْنَا مِنْ دِيَارِنَا وَاَبْنَآئِنَا ۗ فَلَمَّا كُتِبَ عَلَيْهِمُ الْقِتَالُ تَوَلَّوْا اِلَّا قَلِيْلًا مِّنْهُمْ ۗ وَاللّٰهُ عَلِيْمٌۢ بِالظّٰلِمِيْنَ ﴿٢٤٦﴾

हामी अल्लाहको मार्गमा युद्ध गरौं, उनले भनें कि हुनसक्छ कि धर्मयुद्ध (ज़िहाद) अनिवार्य भए पश्चात, तिमी धर्मयुद्ध (ज़िहाद) नगर। उनीहरूले भने कि हामी अल्लाहको मार्गमा धर्मयुद्ध (ज़िहाद) किन गर्ने छैनौं ? हामी त आफ्ना घरहरूबाट विस्थापित भएका छौं र सन्तानहरूबाट टाढा पुऱ्याइएका छौं । अनि जब उनीहरूप्रति धर्मयुद्ध अनिवार्य भयो त केही व्यक्तिहरू बाहेक सबै विमुख भए र अल्लाह (तआ़ला) अत्याचारीहरूलाई राम्ररी जान्दछ ।

وَقَالَ لَهُمْ نَبِيُّهُمْ اِنَّ اللّٰهَ قَدْ بَعَثَ لَكُمْ طَالُوْتَ مَلِكًا ۗ قَالُوْٓا اَنّٰى يَكُوْنُ لَهُ الْمُلْكُ عَلَيْنَا وَنَحْنُ اَحَقُّ بِالْمُلْكِ مِنْهُ وَلَمْ يُؤْتَ سَعَةً مِّنَ الْمَالِ ۗ قَالَ اِنَّ اللّٰهَ اصْطَفٰىهُ عَلَيْكُمْ وَزَادَهٗ بَسْطَةً فِى الْعِلْمِ وَالْجِسْمِ ۗ وَاللّٰهُ يُؤْتِيْ مُلْكَهٗ مَنْ يَّشَآءُ ۗ وَاللّٰهُ وَاسِعٌ عَلِيْمٌ ﴿٢٤٧﴾

(२४७) र उनीहरूसित उनको नबीले भने कि अल्लाह (तआ़ला) ले तालूत (यो एउटा नाम हो) लाई तिम्रो सम्राट बनाइदिएको छ, त भन्नलागे उसको हामीमाथि राज्य कसरी हुनसक्छ र ? उसभन्दा निकै धेरै राज्यको अधिकारी हामी छौं, उसलाई त धनको अधिकता पनि प्रदान गरिएको छैन । त्यस (नबी) ले भने, सुन ! अल्लाह तआ़लाले उसलाई तिमीमाथि प्रधानता दिएको छ र उसलाई ज्ञान एवं शारीरिक बल पनि अत्याधिक प्रदान गरेको छ ।[1]

[1]आदरणीय तालूत त्यस वंशबाट थिएनन्, जसबाट इस्राईलका सन्तानहरूका राजाहरूको श्रृङ्खला चल्दै आएको थियो । उनी निर्धन र एउटा सामन्य सेनानी थिए, जसमथि उनीहरूले आपत्ति गरेका थिए । पैग़म्बरले भने कि यो मेरो चुनाव होइन अल्लाह तआ़लाले उनलाई नियुक्त गरेको छ तैपनि नेतृत्वको लागि धनभन्दा अधिक बुद्धिमता, ज्ञान एवं शारीरिक शक्तिको आवश्यकता छ र तालूत यसमा तिमीहरूभन्दा श्रेष्ठ छन् यसकारण अल्लाहले उनलाई यस पदको लागि रोजेको छ, त्यो अत्याधिक कृपालु छ, जसलाई चाहन्छ आफ्नो कृपा प्रदान गर्दछ । عليم छ अर्थात् त्यो जान्दछ कि राजाधिकारको अधिकारी को छ र को छैन । प्रतीत हुन्छ कि जब उनीहरूलाई ज्ञात भयो कि यो नियुक्ति अल्लाह

वास्तविक कुरो यो हो कि अल्लाह तआ़ला जसलाई चाहन्छ, आफ्नो राज्य दिन्छ, अल्लाह तआ़ला विशाल धन-धान्यले परिपूर्ण एवं सर्वज्ञाता छ ।

(२४८) तथा उनीहरूका नबीले फेरि उनीहरूसित भने त्यसको राज्यको स्पष्ट निशानी यो हो कि तिम्रो पासमा त्यो सन्दूक (बाकस) आउने छ,[1] जसमा

وَقَالَ لَهُمْ نَبِيُّهُمْ إِنَّ ءَايَةَ مُلْكِهِۦٓ أَن يَأْتِيَكُمُ ٱلتَّابُوتُ فِيهِ سَكِينَةٌ مِّن رَّبِّكُمْ وَبَقِيَّةٌ

तआ़लाको तर्फबाट हो तब यसको लागि उनीहरूले कुनै अन्य चिन्हको माँग गरे कि उनका हृदयहरूलाई सन्तोष प्राप्त होस् । यसैकारण अघिल्लो आयतमा एक अन्य लक्षणको वर्णन छ ।

[1]सन्दूक अर्थात् ताबूत, जुनकि तोबबाट लिइएको छ, जसको अर्थ फर्कनु हो, किनभने इस्राईलका सन्तान प्रसादको लागि यसतिर पल्टन्थे । (फ़तहुल क़दीर) यस ताबूतमा आदरणीय मूसा र हारून अलैहिस्सलामका पवित्र वस्तुहरू थिए, यो ताबूत पनि उनका शत्रुले उनीसित खोसेर लगेका थिए । यो ताबूत अल्लाह तआ़लाले निशानीको रूपमा फरिश्ताहरूद्वारा आदरणीय तालूतको घरको द्वारमा राख्न लगाएका थियो । यसलाई देखेर इस्राईलका सन्तानहरु प्रसन्न पनि भए र यसलाई अल्लाह तआ़लाको तर्फबाट निशानी मानेर आदरणीय तालूतलाई आफ्नो राजा मानिहाले र अल्लाह तआ़लाले पनि यसलाई उनीहरुको निम्ति एउटा चमत्कार (आयत) विजय तथा सन्तोषको कारण बनाइदियो । سَكِينَة को अर्थ नै अल्लाह तआ़लाको तर्फबाट विशेष सहायताको अवतरण जसलाई उसले विशेष भक्तहरूमाथि अवतरित गर्दछ, जसको कारण भयङ्कर रणमा जब ठूला-ठूला योद्धाहरूका हृदय कम्पित हुन्छन् तब ईमानवालाहरूका हृदय शत्रुको भयो एवं धाकबाट शून्य र विजय तथा सफलताको आशाले परिपूर्ण हुन्छन्, यसबाट ज्ञात भयो कि नबी र महात्माहरूको अवशेष अल्लाहको आज्ञाले अवश्य विशेषता र उपयोगिता राख्दछ, तर यो आवश्यक छ कि त्यो सहीरुपले उनको (तबर्रुकात) होस् । जसरी कि यस ताबूतमा वास्तवमा आदरणीय मूसा एवं हारुनका पवित्र वस्तुहरू थिए । तर जुनप्रकार आजकल विभिन्न स्थानहरूमा पवित्र अवशेष भनी कैयन् वस्तुहरू छन्, जसका कुनै ऐतिहासिक प्रमाण पूर्णरुपले सिद्ध हुँदैन । यसैप्रकार स्वयं बनाइएका वस्तुहरूबाट पनि प्राप्त हुन सक्दैन । यसैप्रकारले केही मानिसहरू नबी सल्लल्लाहु अलैहि वसल्लमका जुत्ताहरू समान बनाएर आफ्नो पासमा राख्नलाई अथवा घरहरूमा झुण्ड्याउनलाई अथवा विशपरुपले बनाएर कष्ट निवारण तथा मनोकामना पूरा गर्नेवाला ठान्छन् । यसप्रकार चिहानहरूमाथि महात्माहरूका भेटलाई पवित्र वस्तु र त्यहाँका सामान्य भोजलाई पवित्र वस्तु ठान्छन्, जबकि यो अल्लाहका अतिरिक्त अन्यमाथि भेट हुन्, जो शिर्कको परिधिमा आउँछ । यसलाई खानु विषेशरुपले हराम

مِّمَّا تَرَكَ اٰلُ مُوْسٰى وَاٰلُ هٰرُوْنَ تَحْمِلُهُ الْمَلٰٓئِكَةُ ۭ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لَّكُمْ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ﴿٢٤٨﴾

तिम्रो प्रभुको तर्फबाट हृदयको स्थिरताको सामाग्री हुने छ र मूसाका सन्तान एवं, हारुनका सन्तानद्वारा शेष छाडिएको सामान हुने छ, फरिश्ताहरू त्यसलाई उठाएर ल्याउने छन्। निःसन्देह यो त तिम्रो लागि स्पष्ट निशानी हो, यदि तिमीहरू ईमान्दार हौ भने।

فَلَمَّا فَصَلَ طَالُوْتُ بِالْجُنُوْدِ ۙ قَالَ اِنَّ اللّٰهَ مُبْتَلِيْكُمْ بِنَهَرٍ ۚ فَمَنْ شَرِبَ مِنْهُ فَلَيْسَ مِنِّىْ ۚ وَمَنْ لَّمْ يَطْعَمْهُ فَاِنَّهٗ مِنِّىْٓ اِلَّا مَنِ اغْتَرَفَ غُرْفَةً ۢ بِيَدِهٖ ۚ فَشَرِبُوْا مِنْهُ اِلَّا قَلِيْلًا مِّنْهُمْ ۭ فَلَمَّا جَاوَزَهٗ هُوَ وَالَّذِيْنَ اٰمَنُوْا مَعَهٗ ۙ قَالُوْا لَا طَاقَةَ لَنَا الْيَوْمَ بِجَالُوْتَ

(२४९) अनि जब तालूत सेना लिएर निस्के तब भने सुन, एउटा नदीद्वारा[1] अल्लाहले तिम्रो परीक्षा लिनेछ, त जो त्यसबाट जल पिउने छ, त्यो मेरो होइन तथा जो त्यसबाट चाख्दैन त्यो मेरो साथी हो, त्यस व्यक्ति बाहेक जसले आफ्नो हातले एक अञ्जुली पानी भर्दछ त केही बाहेक शेष सबैले जल पिए,[2] (आदरणीय) तालूत जब नदी पार गरे तब उनका साथ जो ईमान्दार थिए उनीहरूले भने कि

छ, चिहानहरूलाई स्नान गराईन्छ र त्यसको पानी पवित्र ठानिन्छ जबकि चिहानहरूलाई स्नान गराउनु ख़ाना-ए-काआ़वाको स्नानको नक्कल हो, जुनकि कुनै प्रकारले उचित छैन, यो अशुद्ध पानी पवित्र कसरी हुनसक्दछ, यी सबै अनुचित कुरा हुन्, यिनको धार्मिक नियमहरूमा कुनै प्रतिधान छैन।

[1]यो नदी जोर्डन र फिलिस्तिन (प्यालिस्टाइन) को मध्येमा छ। (इब्ने कसीर)

[2]नायकका आदेशहरूको पालना आवश्यक छ र जब शत्रुसँग युद्धको कुरा हुन्छ त त्यसको यो विशेषता बरु सय गुना भइहाल्छ। दोस्रो कुरो युद्धको समयमा सेनालाई आवश्यक छ कि आफ्नो भोक, तिर्खा तथा अन्य कठिनाईहरूमा धैर्य राखोस् यसकारण यी दुवै कुराको शिक्षा एवं परीक्षाको लागि तालूतले भनें कि तिम्रो पहिलो परीक्षा नदीमा हुनेछ, जसले पानी पिइहाल्यो, त्यसको मसँग कुनै सम्वन्ध हुने छैन, तर यस चेतावनीको पश्चात पनि अधिकतर व्यक्तिहरूले पानी पिइहाले। यिनीहरूको संख्याको विषयमा व्याख्याकारहरूको मतभेद छ। यसप्रकार नपिउनेहरूको संख्या ३१३ भनिएको छ, जुन रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका सहावा (साथीहरू) को संख्या वद्र नामक स्थानमा भएको युद्धको समयमा थियो। والله أعلم

وَجُنُوْدِهٖ ؕ قَالَ الَّذِيْنَ يَظُنُّوْنَ اَنَّهُمْ مُّلٰقُوا اللّٰهِ ۙ كَمْ مِّنْ فِئَةٍ قَلِيْلَةٍ غَلَبَتْ فِئَةً كَثِيْرَةًۢ بِاِذْنِ اللّٰهِ ؕ وَاللّٰهُ مَعَ الصّٰبِرِيْنَ ﴿٢٤٩﴾

आज त हामीमा शक्ति छैन कि जालूत र त्यसका सेनाहरूसित युद्ध गरौं[1] किन्तु जसलाई अल्लाहसितको साक्षातकारमा विश्वास थियो उनीहरूले भने कि कति यस्ता अल्पसमूह अल्लाहको आज्ञाले ठूला समूहहरूमाथि विजय प्राप्त गरेका छन् तथा अल्लाह धैर्यवान्हरूको साथमा रहेको छ ।

وَلَمَّا بَرَزُوْا لِجَالُوْتَ وَجُنُوْدِهٖ قَالُوْا رَبَّنَاۤ اَفْرِغْ عَلَيْنَا صَبْرًا وَّثَبِّتْ اَقْدَامَنَا وَانْصُرْنَا عَلَى الْقَوْمِ الْكٰفِرِيْنَ ﴿٢٥٠﴾

(२५०) र उनीहरूको जालूत र त्यसका सेनाहरू विरूद्ध अगाडि बढे तब उनीहरूले प्रार्थना गरे, हे हाम्रा पालनकर्ता ! हामीलाई धैर्य प्रदान गर एवं सुदृढ बनाइदेउ तथा काफ़िरवर्ग विरूद्ध हाम्रो सहायता गर ।[2]

فَهَزَمُوْهُمْ بِاِذْنِ اللّٰهِ ۙ وَقَتَلَ دَاوٗدُ جَالُوْتَ وَاٰتٰىهُ اللّٰهُ

(२५१) अत: उनीहरूलाई अल्लाहको आज्ञाले पराजित गरे तथा दाऊदले जालूतको

[1]यी ईमानवालाहरूले पनि जब प्रारम्भमा शत्रुको धेरै ठूलो संख्या देखे, तब आफ्नो कम संख्यालाई हेर्दै यस कुरालाई स्पष्ट गरे । जसमा उनका ज्ञानीहरू र उनीभन्दा अधिक ईमान राख्नेहरूले भनें कि सफलता, संख्यामा अधिकता तथा हतियारको आधारमा पाइँदैन, बरु अल्लाह तआलाको इच्छामा आधारित छ र अल्लाह तआलाको समर्थन प्राप्त गर्नलाई धैर्य हुनु आवश्यक छ ।

[2]जालूत त्यस शत्रु समुदायको सेनानायक थियो, जससित तालूत र साथीहरूको मुकाबिला थियो, यो अमालकाको जाति थियो, जो आफ्नो समयमा योद्धा एवं वीर मानिसहरू ठानिन्थे । उनीहरूको यसै ख्यातिको कारण ठीक युद्धको समयमा ईमानवालाहरूले अल्लाहको दरबारमा धैर्य एवं दृढताको लागि र कुफ्र सामु ईमानवालाहरूको विजय एवं सफलताको प्रार्थना गरे । अर्थात् भौतिक कारणहरूका साथ-साथै ईमानवालाहरूका लागि आवश्यक छ कि उनी अल्लाहको तर्फबाट सफलता तथा विजयको लागि विशेषरुपले प्रार्थना गरुन् जुनप्रकार बद्रको युद्धको समय नबी सल्लल्लाहु अलैहि वसल्लमले अल्लाहको दरबारमा धेरै आग्रह एवं विनम्रताले विजय एवं सफलताको लागि प्रार्थना गर्नु भएको थियो जसलाई अल्लाह तआलाले स्वीकार गऱ्यो जसको कारण मुसलमानहरूको सानो संख्याले काफ़िहरूको धेरै ठूलो संख्यामाथि विजय प्राप्त गऱ्यो ।

الْمُلْكَ وَالْحِكْمَةَ وَعَلَّمَهُ مِمَّا يَشَاءُ ۗ وَلَوْلَا دَفْعُ اللَّهِ النَّاسَ بَعْضَهُمْ بِبَعْضٍ لَفَسَدَتِ الْأَرْضُ وَلَٰكِنَّ اللَّهَ ذُو فَضْلٍ عَلَى الْعَالَمِينَ ۝

हत्या गऱ्यो ।[1] तथा अल्लाहले त्यसलाई राज्य एवं विधान[2] तथा जे इच्छा गऱ्यो त्यो ज्ञान पनि प्रदान गऱ्यो । तथा यदि अल्लाहले केही मानिसहरूलाई अर्को समूहद्वारा हटाउँदै नगरेको भए धर्तीमा बिकार फैलिन्थ्यो तर अल्लाह संसारका मानिसहरूप्रति बडो दयानिधि छ ।[3]

تِلْكَ آيَاتُ اللَّهِ نَتْلُوهَا عَلَيْكَ بِالْحَقِّ ۚ وَإِنَّكَ لَمِنَ الْمُرْسَلِينَ ۝

(२५२) यी अल्लाहका आयतहरू (श्लोकहरू) हुन्, जसलाई हामी तपाईंलाई सत्यका साथ सुनाउँछौं र निश्चय नै तपाईं रसूलहरू (ईशदूत) मध्ये हुनुहुन्छ ।[4]

[1]आदरणीय दाऊद जो न त्यतिखेर न पैगम्बर थिए र न राजा, यस तालूतको सेनामा एउटा साधारण सिपाही थिए । उनीबाट जालूत मारियो र यस थौरै ईमानवालाहरूलाई ठूलो क्रुर बीर एवं योद्धा जातिमाथि विजय गराए ।

[2]यस पश्चात अल्लाह तआलाले आदरणीय दाऊदलाई राजसत्ता र नबूअत दुबै प्रदान गऱ्यो ।

[3]यसमा अल्लाहको एक नियमको चर्चा छ कि त्यो मानव गणकै एउटा समुदायद्वारा अर्को समुदायको अत्याचार तथा प्रभुत्वलाई समाप्त गर्दैरहन्छ, यदि त्यो त्यस्तो नगर्ने भए र कुनै एउटै समुदायलाई सधैं बल एवं अधिकारको सौभाग्य दिराख्थ्यो भने यो धर्ती अत्याचार तथा बिकारले भरिन्थ्यो । अतः अल्लाहको यो नियम संयमवासीहरूको लागि अल्लाहको दयाको विशेष सूचक हो, यसको चर्चा सूरः हज्जको आयत नम्बर ३० तथा ४० मा पनि गरेको छ ।

[4]यी विगत घटनाहरू जसको ज्ञान तपाईंमाथि अवतरित धर्मशास्त्र (पवित्र कुरआन) द्वारा संसारलाई भैराखेको छ, हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) निश्चय तपाईंको नबूअत र सत्यका प्रमाण हुन्, यसको अध्ययन न कुनै पुस्तकमा गरिएको छ न कसैबाट सुनिएको छ, जसबाट स्पष्ट छ कि यी परोक्षका सूचनाहरू हुन् जुन प्रकाशना (ईशवाणी) द्वारा अल्लाह तपाईंमाथि अवतरित गरिराखेको छ, पवित्र ईशवाणी कुरआनका कैयौं स्थानहरूमा समुदायहरूका घटनाको विवरणलाई तपाईंको सत्यताको प्रमाणस्वरुप प्रस्तुत गरिएको छ ।

تِلْكَ الرُّسُلُ فَضَّلْنَا بَعْضَهُمْ عَلٰى بَعْضٍ ۘ مِنْهُمْ مَّنْ كَلَّمَ اللّٰهُ وَرَفَعَ بَعْضَهُمْ دَرَجٰتٍ ؕ وَاٰتَيْنَا عِيْسَى ابْنَ مَرْيَمَ الْبَيِّنٰتِ وَاَيَّدْنٰهُ بِرُوْحِ الْقُدُسِ ؕ وَلَوْ شَآءَ اللّٰهُ مَا اقْتَتَلَ الَّذِيْنَ مِنْ بَعْدِهِمْ مِّنْ بَعْدِ مَا جَآءَتْهُمُ الْبَيِّنٰتُ وَلٰكِنِ اخْتَلَفُوْا فَمِنْهُمْ مَّنْ اٰمَنَ وَمِنْهُمْ مَّنْ كَفَرَ ؕ وَلَوْ شَآءَ اللّٰهُ مَا اقْتَتَلُوْا ۟

(२५३) यी सन्देशवाहकहरूमध्ये हामीले केहीलाई केहीमाथि श्रेष्ठता प्रदान गरेका छौं।[1] उनीमध्ये केहीसित त अल्लाहले कुरा गऱ्यो र केहीलाई उच्च स्थान प्रदान गऱ्यो । र हामीले ईसा पुत्र मरियमलाई चमत्कार प्रदान गऱ्यौं।[2] र पवित्र आत्माबाट उनको समर्थन गरायौं र यदि अल्लाह (तआ़ला) ले चाहेको भए, उनीहरू भन्दा पछिका व्यक्तिहरूले स्पष्ट प्रमाणहरू आए पश्चात परस्पर लडाई गर्ने थिएनन्, तर उनीहरूमा मतभेद भयो । अत: उनीहरूमध्ये केहीले विश्वास गरे र केही विश्वासहीन भए, र यदि अल्लाह (तआ़ला) ले चाहेको भए



[1]कुरआनले एक-अर्को स्थानमा पनि यसलाई वर्णन गरेको छ ।

﴿وَلَقَدْ فَضَّلْنَا بَعْضَ النَّبِيِّنَ على بَعْضٍ﴾ (बनी इस्राईल-५५)

यसकारण यस वास्तविकतामा त कुनै शंका छैन, परन्तु नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएको छ ।

ولا تخيروني من بين الانبياء

"तिमी मलाई नबीहरूमाथि श्रेष्ठता नदेउ ।" (सहीह़ बुखा़री एवं मुस्लिम) अत: यसबाट एउटालाई अर्कोमाथि श्रेष्ठताको इन्कार आवश्यक छैन, बरु यस उम्मतलाई नबीहरूप्रति आदर-सम्मानको शिक्षा दिइएको छ। र यो कि तिमीलाई ती विशेषताहरूको, जसको आधारमा श्रेष्ठता दिइएको छ, त्यसको पूरा ज्ञान छैन, तसर्थ तिमी मेरा पनि विशेषताहरूको तुलनात्मक ब्याख्या नगर, जसबाट ती नबीहरूको सम्मानमा कमी हुन्छ। बरु केही नबीहरूलाई केहीमाथि श्रेष्ठता र सबै पैग़म्बरहरूमाथि नबी सल्लल्लाहु अलैहि वसल्लमको श्रेष्ठता र महानता अहले सुन्नतको विश्वास हो, जसको सुन्नतका किताबहरूबाट पुष्टि हुन्छ । (विस्तृत जानकारीका लागि फ़तहुल क़दीर लिल शौकानी हेर्नुस् ।)

[2]तात्पर्य ती चमत्कार हुन् जुन आदरणीय ईसालाई प्रदान गरिएका थिए। जस्तो मृतकलाई जीवित पार्नु आदि जसको विवरण सूरः आले इमरानमा आउनेछ । पवित्र आत्माबाट तात्पर्य जिब्रील हुन्, जस्तो कि पहिला नै चर्चामा आइसकेको छ ।

وَلٰكِنَّ اللّٰهَ يَفْعَلُ مَا يُرِيْدُ ﴿٢٥٣﴾

उनीहरू आपसमा लडाई गर्दैनथे।[1] तर अल्लाह (तआला) जे चाहन्छ, त्यही गर्दछ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اَنْفِقُوْا مِمَّا رَزَقْنٰكُمْ مِّنْ قَبْلِ اَنْ يَّاْتِيَ يَوْمٌ لَّا بَيْعٌ فِيْهِ وَلَا خُلَّةٌ وَّلَا شَفَاعَةٌ ؕ وَالْكٰفِرُوْنَ هُمُ الظّٰلِمُوْنَ ﴿٢٥٤﴾

(२५४) हे ईमानवालांहरू! जे हामीले तिमीलाई दिएका छौं, त्यसबाट खर्च गर्दै रह, यसभन्दा अघि कि त्यो दिन आओस् जब न कुनै ब्यापार हुनेछ, न मित्रता र न सिफारिश,[2] र विश्वासहीन नै अत्याचारी हुन्।

[1]यस विषयलाई अल्लाह तआलाले कुरआन मजीदमा कैयौं ठाउँमा वर्णित गरेको छ। यसको अर्थ यो कदापि होइन कि अल्लाह तआलाद्वारा उतारिएको धर्ममा अल्लाहको रुचि, मतभेद छ। यो अल्लाहलाई कदापि प्रिय छैन। उसको प्रसन्नता त यो हो कि सबै मनुष्य उसद्वारा उतारिएका नियमहरूको पालन गरी नरकको अग्निबाट आफूलाई बचाऊन्। यसैकारण उसले किताबहरू उतार्‍यो र नबीहरुको श्रृङ्खला स्थापित गर्‍यो। यहाँसम्मकि नबी करीम सल्लल्लाहु अलैहि वसल्लममा रिसालत समाप्त गर्‍यो। तैपनि आफ्ना धर्मराज, ज्ञानी तथा धर्मका प्रचारकहरूद्वारा सत्यतिर निमन्त्रणको लागि एवं पुण्यको आदेश एवं पापका कार्यहरूबाट रोक्नको लागि एउटा श्रृङ्खला अहिले पनि जारी छ। यसको अति आवश्यकतालाई वर्णित गरियो। के-को लागि ? यसकारण कि मानिसहरू अल्लाहको प्रिय मार्गलाई अपनाऊन तर उसले सन्मार्ग र कुमार्ग बताएर कुनै एक मार्गमा हिंड्नको लागि बाध्य गरेको छैन, बरु परीक्षाको लागि त्यसलाई अधिकार एवं विचारहरूको स्वतन्त्रता दिएको छ। यसकारण कोही यसको अधिकारको सही प्रयोग गरी मुसलमान बन्दछ, र कोही यस अधिकार एवं अधीनताको दुरुपयोग गरी विश्वासहीन बन्न पुग्छ, यो उसको इच्छा एवं चाहना हो, जुन उसको प्रसन्नताभन्दा भिन्नै विषय हो।

[2]यहूदी र इसाई कृत्घ्न र मिश्रणवादी आ-आफ्ना प्रमुख ऋषि, पुण्य-आत्मा, नबी, महात्मा र गुरुहरूका बारेमा यही विश्वास राख्दछन् कि अल्लाह तआलामाथि उनीहरूको यति प्रभाव छ कि उनीहरू आफ्ना अनुयायीहरूका लागि जे कुरा चाहन्छन् अल्लाह (तआला) बाट पूरा गराउन सक्दछन् र स्वीकार गराउँछन्। यसैलाई उनीहरू शिफाअत (अभिस्ताव) भन्दछन्। अर्थात् उनीहरूको लगभग त्यही विश्वास छ, जुन आजकलका अशिक्षितहरूको छ कि हाम्रा महात्मा अल्लाह तआला समक्ष हठ गरी बस्नेछन् र क्षमा गराएर नै उठ्छन्। यस आयतमा भनिएको छ कि यसप्रकारको अभिस्तावको अल्लाहकहाँ कुनै अस्तित्व छैन। अनि यस पश्चात आयतल कुर्सी र अन्य आयत र हदीसहरूमा भनिएको छ कि अल्लाह तआला कहाँ एउटा अर्कै प्रकारको (क्षमादान) सिफारिश हुनेछ, परन्तु यो तिनैले गराउन सक्नेछन्, जसलाई अल्लाह तआलाले अनुमति दिनेछ र केवल त्यस भक्तको लागि

ٱللَّهُ لَآ إِلَٰهَ إِلَّا هُوَ ٱلْحَىُّ ٱلْقَيُّومُ ۚ لَا تَأْخُذُهُۥ سِنَةٌ وَلَا نَوْمٌ ۚ لَّهُۥ مَا فِى ٱلسَّمَٰوَٰتِ وَمَا فِى ٱلْأَرْضِ ۗ مَن ذَا ٱلَّذِى يَشْفَعُ عِندَهُۥٓ إِلَّا بِإِذْنِهِۦ ۚ يَعْلَمُ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ ۖ وَلَا يُحِيطُونَ بِشَىْءٍ مِّنْ عِلْمِهِۦٓ إِلَّا بِمَا شَآءَ ۚ وَسِعَ كُرْسِيُّهُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ ۖ وَلَا يَـُٔودُهُۥ حِفْظُهُمَا ۚ وَهُوَ ٱلْعَلِىُّ ٱلْعَظِيمُ ﴿٢٥٥﴾

(२५५) अल्लाह (तआला) नै सत्य पूज्य छ, जसबाहेक अरु कोही आराध्य छैन, जो जीवित छ, एवं सबैको सहायक आधार छ, जसलाई न ऊँघ लाग्दछ न निद्रा नै, उसको स्वामित्वमा धर्ती र आकाशका सबै कुराहरू छन्, को छ जो उसको आज्ञा बिना उसको जुनाफमा शिफाअत (सिफारिश) गर्न सकोस्, त्यो सबै जान्दछ, जे कुरा उनीहरूका अगाडि छन्, जे उनीहरूका पछाडी छन्। (दृश्य एवं अदृश्य) र उनीहरूले उसको इच्छा बिना उसको ज्ञानको कुनै कुराको घेरा (आवृत्त) गर्न सक्दैनन्,।[1] त्यसको कुर्सीको परिधिले धर्ती र आकाशलाई घेरेको छ ।

गर्न सक्नेछन्, जसको लागि अल्लाह तआलाले आज्ञा प्रदान गर्नेछ र अल्लाह तआलाले मात्र एकेश्वरवादीहरूका लागि नै आज्ञा दिनेछ । यो सिफारिश फरिश्ताहरू पनि गर्नेछन्, नबी र रसूल पनि, शहीद र पुण्य आत्मा पनि तर अल्लाहमाथि ती सबैमध्ये कसैको पनि प्रभाव हुनेछैन । यसको विपरीत उनी स्वयं अल्लाह तआलाको भयले यति भयभीत हुनेछन् कि उनीहरूका अनुहार ओइलाएका (निराशापूर्ण) हुनेछन् ।

﴿ وَلَا يَشْفَعُونَ إِلَّا لِمَنِ ٱرْتَضَىٰ وَهُم مِّنْ خَشْيَتِهِۦ مُشْفِقُونَ ﴾

"उनीहरू उसैको लागि सिफारिश गर्नेछन्, जोसित त्यो प्रसन्न छ, र उनी उसको भयले भयभीत रहनेछन् ।" (सूरः अल-अम्बिया २८)

[1]यो आयतुल कुर्सी हो । सहीह हदीसहरूमा यसको निकै महत्व वर्णन गरिएको छ । जस्तो कि यो कुर्आनको सबैभन्दा उच्च आयत हो । यसलाई राति पढ्नाले शैतानबाट सुरक्षा रहन्छ । यसलाई प्रत्येक नमाज़ पश्चात पढ्नुपर्छ । कुर्सीसित केही विद्वानहरूले खुट्टा राख्ने स्थान, केहीले सामर्थ्य, केहीले राज्य र केहीले अर्श अर्थ लगाएका छन् । तर अल्लाह तआलाका महानता एवं विशेषताहरूको विषयमा मोहद्दिसहरू (हदीसका ज्ञानी) र पूर्वजहरूको यही मत छ कि अल्लाह तआलाका जुन विशेषताहरू, जसरी कुर्आन र हदीसमा वर्णित छन्, उनीहरूमाथि बिना कुनै तर्क-वितर्क विश्वास गरियोस् । यसकारण यही ईमान हुनुपर्छ कि वास्तवमा कुर्सी छ, जुन अर्श (ईश्वरीय सिंहासन) भन्दा भिन्न छ । यो कुन प्रकारको छ, यसमाथि त्यो कसरी बस्दछ ? यसको वर्णन हामी गर्न सक्दैनौं किनभने यसको भौतिकता एवं वास्तविकताको विषयमा हामीलाई ज्ञान छैन ।

لَآ إِكۡرَاهَ فِي ٱلدِّينِۖ قَد تَّبَيَّنَ ٱلرُّشۡدُ مِنَ ٱلۡغَيِّۚ فَمَن يَكۡفُرۡ

र अल्लाह (तआ़ला) लाई उनको सुरक्षाबाट न थकित हुन्छ न अल्छी मान्दछ। तथा ऊ धेरै महान र सर्वोच्च छ।

(२५६) धर्मको विषयमा कुनै जबरजस्ती छैन, सत्य, असत्यबाट छुट्टियो,[1] यसकारण जसले

[1]यस आयतको अवतरणका कारणहरूमा भनिएको छ कि अन्सारका केही युवक यहूदी र इसाई भइसकेका थिए, जब यी अन्सार मुसलमान भए तब उनीहरूले आफ्ना युवकहरूमाथि (जो उनका सन्तानहरू थिए), जो इसाई तथा यहूदी भइसकेका थिए, जोड दिए कि उनी मुसलमान भइहालून् त्यसपछि यो आयत अवतरित भयो। केही व्याख्याकारहरूले यसलाई अहले किताबको लागि विशेष मानेका छन्, अर्थात् यदि मुसलमानहरूको राज्यमा अहले किताब रहन्छन्, अनि उनी जिज़्या (शरणागत कर) दिन्छन् भने उनीहरूलाई इस्लाम धर्म स्वीकार गर्न बाध्य गर्न सकिदैन, परन्तु यो आयत आदेश अनुसार सामान्य छ, अर्थात् कसैलाई पनि इस्लाम स्वीकार गर्न बाध्य गर्न सकिदैन, किनभने अल्लाह तआ़लाले सन्मार्ग र कुमार्ग दुबैलाई स्पष्ट गरिदिएको छ। तर कुफ्र र शिर्कको प्रभावलाई कम गर्नको लागि युद्ध तथा बाध्य गर्नु अर्कै कुरा हो। उद्देश्य यो हो कि समाजबाट त्यस शक्तिलाई क्षीण र प्रभावलाई समाप्त गर्नु हो, जुन अल्लाहको धर्मअनुसार कर्म र त्यसका प्रचारमा बाधक बन्दछन्, ताकि प्रत्येक व्यक्ति आफ्नो इच्छा अनुसार चाहन्छ भने कुफ्रको मार्गमा हिंडोस् अथवा इस्लाम धर्म स्वीकार गरोस्, किनभने बाधा बन्ने व्यक्तिहरू समय-समयमा देखा परिरहनेछन्, यसकारण धर्मयुद्धको आदेश र त्यसको आवश्यकता प्रलयसम्म परिराखेको छ। जस्तो कि हदीसमा छ «الجِهَادُ مَاضٍ إِلَىٰ يَوْمِ القِيَامَةِ» (धर्मयुद्ध कयामतसम्म जारी रहनेछ) स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लमले काफिर र मूर्तिपूजकहरूसित धर्मयुद्ध गर्नुभएको छ र भन्नुभयो :

«أُمِرْتُ أَنْ أُقَاتِلَ النَّاسَ حَتَّىٰ يَشْهَدُوا»

"मलाई आदेश दिइएको छ कि म मानिसहरूसित त्यसबेलासम्म धर्मयुद्ध गरुँ, जबसम्म तिनीहरू لا إله الا الله र محمد رسول الله लाई स्वीकार गर्दैनन्।" (अल-हदीस सहीह बुखारी, किताबूल ईमान, बाब फइन ताबू अव अक़ामुस्सलात) यसैप्रकार इस्लामबाट विमुख हुने दण्ड (हत्या) बाट पनि यस आयतको विवाद छैन। (जस्तो कि केही ज्ञाताहरूले सिद्ध गर्न प्रयत्न गर्दछन्) किनभने इस्लाम धर्मबाट विमुखतामाथि जुन मृत्युदण्ड दिएको छ, त्यो बाध्य गर्नु होइन बरु इस्लामी राज्यका विचारहरूको स्थितिको सुरक्षा हो, एउटा इस्लामी राज्यमा क़ाफिरलाई आफ्नो कुफ्रमा बस्न अधिकार त अवश्य छ, परन्तु यदि त्यो एकपटक इस्लाम धर्म स्वीकार गर्छ भने त्यसबाट बिद्रोह एव विमुखता तथा अवहेलनाको

بِالطَّاغُوتِ وَيُؤْمِن بِاللَّهِ فَقَدِ اسْتَمْسَكَ بِالْعُرْوَةِ الْوُثْقَىٰ لَا انفِصَامَ لَهَا ۗ وَاللَّهُ سَمِيعٌ عَلِيمٌ ﴿٢٥٦﴾

अल्लाह (तआ़ला) का अतिरिक्त अन्य देवहरूलाई नकारेर अल्लाह (तआ़ला) मा निष्ठा स्थापित गऱ्यो, उसले बलियो सहारा समात्यो, जुन कहिल्यै टुट्दैन र अल्लाह (तआ़ला) सर्वश्रोता, सर्वज्ञाता छ ।

اللَّهُ وَلِيُّ الَّذِينَ آمَنُوا يُخْرِجُهُم مِّنَ الظُّلُمَاتِ إِلَى النُّورِ ۖ وَالَّذِينَ كَفَرُوا أَوْلِيَاؤُهُمُ الطَّاغُوتُ يُخْرِجُونَهُم مِّنَ النُّورِ إِلَى الظُّلُمَاتِ ۗ أُولَٰئِكَ أَصْحَابُ النَّارِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٢٥٧﴾

(२५७) निष्ठावानहरूको संरक्षक अल्लाह तआ़ला स्वयं छ, त्यो उनीहरूलाई अन्धकार बाट निकालेर प्रकाशतिर लैजान्छ, र काफिरहरूका मित्र शैतान हुन्, उनीहरू तिनलाई प्रकाशबाट निकालि अन्धकारतिर लैजान्छन् । यी व्यक्तिहरू नरकबासी हुन्, जो सधैंभरि त्यसैमा रहिरहनेछन् ।

أَلَمْ تَرَ إِلَى الَّذِي حَاجَّ إِبْرَاهِيمَ فِي رَبِّهِ أَنْ آتَاهُ اللَّهُ الْمُلْكَ إِذْ قَالَ إِبْرَاهِيمُ رَبِّيَ الَّذِي يُحْيِي وَيُمِيتُ قَالَ أَنَا أُحْيِي وَأُمِيتُ ۖ قَالَ إِبْرَاهِيمُ فَإِنَّ اللَّهَ يَأْتِي بِالشَّمْسِ

(२५८) हे मुहम्मद ! के तिमीले त्यसलाई देखेनौं, जसले राज्य पाएर इब्राहीम (अलैहिस्सलाम) सित त्यसको पालनकर्ताको विषयमा विवाद गऱ्यो जब इब्राहीमले भने कि मेरो पोषक त त्यो हो जो जीवित पार्दछ एवं मार्दछ, (जीवन र मृत्यु प्रदान गर्दछ) उसले भन्यो म पनि जीवित पार्दछु र मार्दछु, इब्राहीम

विमुखता तथा अवहेलनाको आज्ञा दिन सकिदैन, अत: राम्ररी सोच-विचार गरेर इस्लाम धर्म स्वीकार गरोस्, किनभने यदि यसको आज्ञा दिइएको भए, मूल विचारहरूको यो महल ध्वस्त हुने थियो र दुरविचारहरूको बाढी आउने थियो जसले इस्लामी समाजमा शान्तिलाई तथा राज्यको स्थायित्वलाई खतरामा पार्न सक्थ्यो तथा जुनप्रकार मानव अधिकारको नाममा हत्या, चोरी, बलात्कार तथा डकैतीको आज्ञा प्रदान गर्न सकिदैन, त्यसैप्रकार विचारहरूको स्वतन्त्रताको नाममा इस्लामी राज्यमा वैचारिक विद्रोहको आज्ञा दिन सकिदैन । यो बाध्यता अथवा दबाब होइन । बरु विमुख हुने (मुर्तद) को हत्या त्यसैप्रकार न्यायसगत छ, जुनप्रकार हत्या तथा चारित्रिक अपराध गर्नेहरूलाई कठोर दण्ड दिनु पनि न्याय हो । एउटाको उद्देश्य राज्यको वैचारिक सुरक्षा र अर्कोको उद्देश्य देशको अशान्तिबाट सुरक्षा हो र दुबै उद्देश्य एउटा राज्यको लागि अति आवश्यक छन् । आज इस्लामी देशहरू यी दुबै उद्देश्यहरूबाट विचलित भई, जुन समस्या अशान्ति र कठिनाईहरूले घेरिएका छन्, उनलाई भन्न आवश्यक छैन ।

مِنَ الْمَشْرِقِ فَأْتِ بِهَا مِنَ الْمَغْرِبِ فَبُهِتَ الَّذِي كَفَرَ ۗ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٢٥٨﴾

(अलैहिस्सलाम) ले भने अल्लाह (तआला) सूर्यलाई पूर्वतिरबाट ल्याउँछ, त्यसलाई तिमी पश्चिमतिरबाट ल्याउ । तब त्यो काफिर आश्चर्य चकित भयो, र अल्लाह (तआला) अत्याचारीहरूलाई मार्गदर्शन गर्दैन ।

أَوْ كَالَّذِي مَرَّ عَلَىٰ قَرْيَةٍ وَهِيَ خَاوِيَةٌ عَلَىٰ عُرُوشِهَا قَالَ أَنَّىٰ يُحْيِي هَٰذِهِ اللَّهُ بَعْدَ مَوْتِهَا ۖ فَأَمَاتَهُ اللَّهُ مِائَةَ عَامٍ ثُمَّ بَعَثَهُ ۖ قَالَ كَمْ لَبِثْتَ ۖ قَالَ لَبِثْتُ يَوْمًا أَوْ بَعْضَ يَوْمٍ ۖ قَالَ بَل لَّبِثْتَ مِائَةَ عَامٍ فَانظُرْ إِلَىٰ طَعَامِكَ وَشَرَابِكَ لَمْ يَتَسَنَّهْ ۖ وَانظُرْ إِلَىٰ حِمَارِكَ وَلِنَجْعَلَكَ آيَةً لِّلنَّاسِ

(२५९) अथवा त्यस व्यक्ति समान जसको गमन त्यस बस्तीमा भयो, जुन छत सहित ढलेर भग्नावशेष भएको थियो । उसले भन्यो ,यसको मृत्यु पश्चात अल्लाह तआलाले त्यसलाई कसरी जीवित पार्नेछ ?[1] तब अल्लाह (तआला) ले त्यसलाई सय वर्षसम्मका लागि मारिदियो,र त्यसलाई (जीवित) उभ्यायो, सोध्यो, "कति अवधि यस अवस्थामा व्यतीत भयो ?" उत्तर दियो कि, "एक दिन अथवा दिनको केही भाग ।"[2] अल्लाहले भन्यो तिमी यस अवस्थामा सय वर्षसम्म रहयौ । अनि अब तिमी आफ्नो भोजन पदार्थलाइ

[1](أو كالذي) को सम्बन्ध प्रथम घटनासित छ एउटा अर्थ हो कि तपाईंले (पहिलो घटना जस्तै) त्यस व्यक्तिको कथामा विचार गर्नुभएन जो एक वस्तीबाट गुज्रो, त्यो व्यक्ति को थियो ? यसको विषयमा विभिन्न मत व्यक्त गरिएका छन् । धेरै प्रसिद्ध नाम आदरणीय वजैरको छ जसको केही सहाबा र ताबईन पक्षधर छन् । والله أعلم यसभन्दा पहिलाको घटना (आदरणीय इब्राहीम र नमरुद) मा प्रतिबन्ध अल्लाह तआलाको प्रमाण थियो र यस दोस्रो घटनाले त्यस व्यक्तिलाई र त्यसको गधालाई सय वर्ष पश्चात पूनर्जीवित गरिदियो यहाँसम्मकि त्यसका खाने-पिउने कुरोलाई पनि नष्ट हुन दिएन । त्यही अल्लाह तआला केयामतका दिन सबै मनुष्यहरूलाई पुनर्जीवित गर्नेछ । जब त्यो सय वर्ष पश्चात जीवित गर्न सक्दछ, भने हजारौं वर्ष पश्चात उसको लागि के कठिनाई छ ।

[2]भनिन्छ कि जब त्यो व्यक्ति मरेको थियो तब सूर्य उदाएको केही समय व्यतीत भएको थियो र जब त्यो जीवित भयो तब सन्ध्या पनि भएको थिएन । तसर्थ उसले अनुमान लगाएको थियो कि यदि म हिजो आएको थिएँ भने एक दिन बित्यो अन्यथा दिनको केही भाग व्यतीत भएको छ जबकि वास्तविकता यो छ कि यसको यस घटनाको अवधि सय वर्षको थियो ।

وَانْظُرْ إِلَى الْعِظَامِ كَيْفَ نُنْشِزُهَا ثُمَّ نَكْسُوهَا لَحْمًا ۚ فَلَمَّا تَبَيَّنَ لَهُ قَالَ أَعْلَمُ أَنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ۝

हेर कि कदापि नष्ट भएन, र आफ्ना गधालाई पनि हेर । हामीले तिमीलाई मानिसहरूका लागि लक्षण बनाउँछौं । तिमी हेर कि हामी अस्थिहरूलाई कुन प्रकारले खडा गर्छौं, फेरि तिनीहरूमाथि मासु चढाउँछौं ।" जब यो सबै स्पष्ट भइसक्यो, तब त्यसले भन्यो "म जान्दछु कि अल्लाह (तआला) सर्वशक्तिमान छ ।"[1]

وَإِذْ قَالَ إِبْرَاهِيمُ رَبِّ أَرِنِي كَيْفَ تُحْيِي الْمَوْتَىٰ ۖ قَالَ أَوَلَمْ تُؤْمِن ۖ

(२६०) र (स्मरण गर) जब इब्राहीम (अलैहिस्सलाम) ले भने,"हे मेरो प्रभु ! मलाई देखाउ कि तिमी मृतकलाई कसरी जीवित पार्नेछौ ?"[2] अल्लाह (तआला) ले

---

[1]अर्थात् विश्वास त मलाई पहिले नै थियो, तर अब आँखाले देखेर विश्वास एवं ज्ञानमा झन् दृढता आयो ।

[2]यो जीवन-मृत्युको दोस्रो घटना हो, जुन एक परम आदरणीय पैग़म्बर माननीय इब्राहीम अलैहिस्सलामको इच्छा र उनको हृदयको सन्तुष्टिका लागि देखाइयो । चार पंक्षी कुन-कुन थिए ? व्याख्याकारहरूले विभिन्न नाम भनेका छन्, परन्तु नामहरूको निर्धारणले कुनै लाभ छैन, यसकारण अल्लाहले पनि उनीहरूका नामको वर्णन गरेन । यी चार विभिन्न पंक्षी थिए (فصرهن) को एउटा अर्थ (أملهن) गरिएको छ, अर्थात उनलाई "हिलाले" (परिचित गराइहालून्) ताकि जीवित भएपश्चात उनलाई सरलताले चिन्न सकुन् कि यी तिनै पंक्षी हुन् र कुनै प्रकारको शंका शेष नरहोस् । यस अर्थको आधारमा यो मान्नुपर्ने छ कि (ثم قطعهن) अनि उनीहरूलाई (टुक्रा-टुक्रा गर) लुकेको छ । अर्को अर्थ قطعهن (टुक्रा टुक्रा गर) सित गरिएको छ । यस स्थितिमा नलुकेको मानेर अर्थ स्पष्ट हुन्छ । अर्थ यो हो कि टुक्रा-टुक्रा गरी विभिन्न पहाडहरूमा यिनका भाग मिलाएर राखिदेउ, अनि तिमी आवाज दिन्छौ भने तिनीहरू जीवित भएर तिम्रो पासमा आउनेछन् । अत: यस्तै नै भयो । केही आधुनिक एवं प्राचीन व्याख्याकार जो सहाबा र ताबईनको व्याख्या तथा महात्माहरूका (सलफ) विचार र नियमहरूलाई विशेषता दिदैनन् (فصرهن) को अनुवाद "परिचित गराउ" गरेका छन् र तिनका टुक्रा-टुक्रा गर्न र पहाडहरूमा तिनका भाग छर्नलाई र त्यसपछि अल्लाहको शक्तिले तिनलाई जोड्ने कुरो उनीहरू स्वीकार गर्दैन । तर यो व्याख्या सही होइन । यसबाट घटनाको सारा सम्मान समाप्त हुन्छ । र मरेकालाई जीवित पार्ने प्रश्न जस्ताको त्यस्तै बनिरहन्छ । यद्यपि यस घटनाको वर्णनको उद्देश्य अल्लाह तआलाको महान शक्ति जीवनमरणमाथि उसको पूर्णरुपले प्रभावको प्रमाण

قَالَ بَلٰى وَلٰكِنْ لِّيَطْمَئِنَّ قَلْبِيْ ؕ قَالَ فَخُذْ اَرْبَعَةً مِّنَ الطَّيْرِ فَصُرْهُنَّ اِلَيْكَ ثُمَّ اجْعَلْ عَلٰى كُلِّ جَبَلٍ مِّنْهُنَّ جُزْءًا ثُمَّ ادْعُهُنَّ يَاْتِيْنَكَ سَعْيًا ؕ وَاعْلَمْ اَنَّ اللّٰهَ عَزِيْزٌ حَكِيْمٌ

भन्यो,"तिमीलाई ईमान (विश्वास) छैन र ?" उत्तर दिए, "ईमान त छ तर मेरो हृदयलाई सन्तोष प्राप्त हुनेछ।" भन्यो,"चार वटा पंक्षी ल्याउ", तिनीहरूलाई टुक्रा-टुक्रा पार । अनि हरेक पर्वतमा उनको एक-एक भाग राखिदेउ। अनि उनीहरूलाई बोलाउ, तिनीहरू तिम्रो पासमा तीब्र गतिले आइपुग्ने छन् । र जानिराख कि अल्लाह (तआ़ला) सर्वशक्तिशाली एवं सर्वज्ञानी छ ।

مَثَلُ الَّذِيْنَ يُنْفِقُوْنَ اَمْوَالَهُمْ فِيْ سَبِيْلِ اللّٰهِ كَمَثَلِ حَبَّةٍ اَنْۢبَتَتْ سَبْعَ سَنَابِلَ فِيْ كُلِّ سُنْۢبُلَةٍ مِّائَةُ حَبَّةٍ ؕ وَاللّٰهُ يُضٰعِفُ لِمَنْ يَّشَآءُ ؕ وَاللّٰهُ وَاسِعٌ عَلِيْمٌ

(२६१) जुन व्यक्तिहरू आफ्ना धन सम्पत्ति अल्लाह (तआ़ला) का मार्गमा खर्च गर्दछन्, उनीहरूको समानता त्यस गेडा (दाना) जस्तो छ, जसमा सातवटा बालाहरू निस्कन्छन् र हरेक बालामा सय वटा दाना हुन्छन्, र अल्लाह (तआ़ला) जसलाई चाहन्छ, कैयौं गुणा बृद्धि गरि प्रदान गर्दछ।[1]

---

हो कि नबी सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय इब्राहीमको यस घटनाको वर्णन गरी भन्नुभयो : «نَحْنُ أَحَقُّ بِالشَّكِّ مِنْ إِبْرَاهِيمَ»

"हामी इब्राहीमभन्दा धेरै शंकाको अधिकारी छौं।" (सहीह बुखारी किताबुत्तफ़सीर) यसको अर्थ यो कदापि होइन कि इब्राहीमले शंका गर्नुभयो अत: हामीलाई उनीभन्दा अधिक शंकाको अधिकार पुग्दछ। बरु अर्थ यो हो कि आदरणीय इब्राहीमबाट शंकाको निस्तारण छ, अर्थात इब्राहीमले जीवन मृत्युको समस्यामा शंका गर्नुभएन, यदि उहाँले शंकाको प्रदर्शन गरेको भए, हामी अवश्य शंका गर्नमा उनीभन्दा अधिक अधिकारी हुन्थ्यौं। (र जानकारीको लागि हेर्नुस् फ़तहुल क़दीर, अल-शौकानी)

[1] यो अल्लाहको मार्गमा दान दिनुको श्रेष्ठता हो। यसबाट तात्पर्य यदि धर्मयुद्ध छ भने यसको अर्थ यो हुनेछ कि धर्मयुद्धमा व्यय गरिएको धनको पुण्य यो हुनेछ। र यदि यसबाट तात्पर्य सबै पुण्यका लागि व्यय गरिएको धन हो भने यो श्रेष्ठता व्यय तथा दान जुन स्वेच्छाले अल्लाहको मार्गमा गरिएको हुनेछ र अन्य पुण्य الحسنة بعشر أمثالها (एक पुण्यको प्रतिफल दश गुना छ) को परिधिमा आउने छ। (फतहुल क़दीर) अर्थात अल्लाहको मार्गमा व्यय गरिएको धनको महत्व एवं विशेषताको कारण स्पष्ट छ कि जबसम्म सामान र हतियारका युद्धको लागि प्रबन्ध हुनेछैन,

र अल्लाह (तआला) महान, व्यापक एवं सर्वज्ञाता छ ।

(२६२) ती व्यक्तिहरू जसले आफ्ना धन अल्लाह (तआला) को मार्गमा खर्च गर्दछन्, अनि त्यस पश्चात उपकार जताउँदैनन् र न कष्ट दिन्छन् ।[1]उनीहरूको फल उनीहरूको प्रभुको पासमा छ, उनलाई न त कुनै भय हुनेछ, न उनी उदास (शोकग्रस्त) हुनेछन् ।

الَّذِينَ يُنفِقُونَ أَمْوَالَهُمْ فِي سَبِيلِ اللَّهِ ثُمَّ لَا يُتْبِعُونَ مَا أَنفَقُوا مَنًّا وَلَا أَذًى ۙ لَّهُمْ أَجْرُهُمْ عِندَ رَبِّهِمْ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٢٦٢﴾

(२६३) कोमल वचन र क्षमा त्यस दानभन्दा उत्तम छ, जसपश्चात दुख दिइन्छ ।[2] र अल्लाह (तआला) निस्पृह एवं अत्यन्त सहनशील छ ।

قَوْلٌ مَّعْرُوفٌ وَمَغْفِرَةٌ خَيْرٌ مِّن صَدَقَةٍ يَتْبَعُهَا أَذًى ۗ وَاللَّهُ غَنِيٌّ حَلِيمٌ ﴿٢٦٣﴾

सेनाको कार्य पनि शून्य हुनेछ । सामान र हतियार बिना धन एकत्रित गर्न सकिँदैन ।

[1]अल्लाहको मार्गमा धन व्यय गर्नुको श्रेष्ठताको जुन वर्णन भइसकेको छ केवल त्यस व्यक्तिलाई प्राप्त हुन सक्नेछ, जो माल व्यय गरिसके पश्चात उपकार जनाउँदैन, र मुखले यस्ता शब्द भन्दैन जसबाट कुनै निर्धनको सम्मानलाई चोट पुग्दछ र उसलाई कष्टको आभास हुन्छ । यो यति ठूलो अपराध हो कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "केयामतका दिन अल्लाह तआला तीन प्रकारका व्यक्तिहरूसँग कुरा गर्ने छैन, ती मध्ये एउटा उपकार जताउने व्यक्ति हो ।" (मुस्लिम किताबुल ईमान)

[2]भिक्षुकसित कोमल वचनले बोल्नु तथा प्रार्थनारुपी वाक्य (अल्लाह तिमीलाई पनि र मलाई पनि अन्य कृपा र दया प्रदान गरोस् आदि) बाट उत्तर दिनु उचित कथन हो । (مغفرة) को अर्थ हो कि भिखारी र त्यसको आवश्यकतालाई मानिसहरू समक्ष प्रदर्शित गर्नुबाट रोकिनु तथा त्यसलाई लुकाउनु हो । र यदि भिखारीको मुखबाट कुनै अनुचित शब्द निस्कन्छ तैपनि त्यसलाई नसुने झैं गर्नु पनि यसमा सम्मिलित छ । अर्थात भिखारीलाई दान दिनुको सट्टा उससित कोमल वचन बोल्नु, उसको कुनै अन्यथा कुरोलाई नसुनेझैं गर्नु तथा त्यसलाई लुकाउनु राम्रो हो, जसपश्चात त्यसलाई मानिसहरू सामु अपमानको सामना गर्न नपरोस् तथा त्यसको हृदयलाई कष्ट नहोस् । यसकारण हदीसमा भनिएको छ «الْكَلِمَةُ الطَّيِّبَةُ صَدَقَةٌ» (कोमल वचन पनि दान हो) र आफ्नो भाईसित नम्रतासित भेट्नु उचित अर्थात् भलाई हो । «وَإِنَّ مِنَ الْمَعْرُوفِ أَنْ تَلْقَى أَخَاكَ بِوَجْهٍ طَلْقٍ» (सहीह मुस्लिम उदधृत फ़तहुल क़दीर)

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لَا تُبۡطِلُواْ صَدَقَٰتِكُم بِٱلۡمَنِّ وَٱلۡأَذَىٰ كَٱلَّذِي يُنفِقُ مَالَهُۥ رِئَآءَ ٱلنَّاسِ وَلَا يُؤۡمِنُ بِٱللَّهِ وَٱلۡيَوۡمِ ٱلۡأٓخِرِۖ فَمَثَلُهُۥ كَمَثَلِ صَفۡوَانٍ عَلَيۡهِ تُرَابٞ فَأَصَابَهُۥ وَابِلٞ فَتَرَكَهُۥ صَلۡدٗاۖ لَّا يَقۡدِرُونَ عَلَىٰ شَيۡءٖ مِّمَّا كَسَبُواْۗ وَٱللَّهُ لَا يَهۡدِي ٱلۡقَوۡمَ ٱلۡكَٰفِرِينَ ٢٦٤

(२६४) हे निष्ठावानहरू ! आफ्ना दानलाई उपकार जताएर र दुख पुर्‍याएर व्यर्थ नगर ,जुन प्रकारले त्यो व्यक्ति जो आफ्नो धन देखावा (प्रदर्शन) को लागि खर्च गर्दछ र न अल्लाह (तआला) प्रति ईमान राख्दछ र न प्रलयमा, त्यसको उपमा त्यस चिल्लो ढुङ्गाको जस्तो छ, जसमाथि अलिकति माटो रहन्छ, अनि त्यसमाथि जोडदार वर्षा हुन्छ र त्यसल त्यसलाई बिल्कुल स्वच्छ र कठोर छाडिदिन्छ ।[1] यी पाखण्डीहरूलाई आफ्ना कमाईबाट कुनै कुरो हात लाग्दैन र अल्लाह (तआला) क़ाफिरहरूका समुदायलाई मार्गदर्शन गर्दैन ।

وَمَثَلُ ٱلَّذِينَ يُنفِقُونَ أَمۡوَٰلَهُمُ ٱبۡتِغَآءَ مَرۡضَاتِ ٱللَّهِ وَتَثۡبِيتٗا مِّنۡ أَنفُسِهِمۡ كَمَثَلِ جَنَّةِۭ بِرَبۡوَةٍ أَصَابَهَا وَابِلٞ فَـَٔاتَتۡ أُكُلَهَا

(२६५) र ती व्यक्तिहरुको उपमा जो आफ्ना माल अल्लाह (तआला) को प्रसन्नताको प्राप्तिको लागि खुशी हृदयले र विश्वासका साथ खर्च गर्दछन्, त्यस बगैंचा जस्तो छ, जुन अग्लो धर्तीमा छ[2] र जोडदार वर्षाले आफ्नो फल

[1]यस आयतमा यो भनिएको छ कि दान-पुण्य गरेर, उपकार गरेर, जताउनु र कष्टदायक कुराहरू गर्नु ईमानवालाहरूलाई शोभा दिंदैन, बरु ती मानिसहरूको बानी हो, जो मुनाफिक़ (अवसरवादी) छन्, उनीहरू आडम्बरको लागि खर्च गर्दछन् । अर्को यस्तो व्यय गर्नुको तुलना यस्तो छ कि जस्तो पत्थरको चट्टानमा माटो जम्छ र कोही त्यसमा बिउ छरिदिन्छ र त्यस पश्चात भारी वर्षा हुन्छ, अनि सबैथोक बगेर जान्छ र त्यो पत्थर माटोबाट बिल्कुल सफा हुन्छ । (अर्थात्) जुनप्रकार त्यो वर्षा त्यस पत्थरको लागि लाभप्रद भएन, त्यसैप्रकार देखावटीको दान पनि त्यसलाई कुनै लाभ पुऱ्याउन सक्ने छैन ।

[2]यो ती ईमानवालाहरूको शोभा हो जो अल्लाह तआलालाई प्रसन्न गर्नको निम्ति व्यय गर्दछन् । यिनको खर्च त्यस बगैंचा समान छ, जुन अत्याधिक उचाईमा छ, कि यदि अधिक बर्षा हुन्छ भने आफ्नो फल दुईगुना गर्नसक्छ । र यदि वर्षा हुँदैन भने सिमसिमे पानी नै उसको लागि पर्याप्त छ । यसप्रकारको दान पनि, चाहे जति कम किन नहोस्, परन्तु अल्लाहकहाँ कैयन् गुना प्रतिफल र पुण्य हुनेछ । جنة त्यस धर्तीलाई भन्दछन् जसमा यति अधिकताले वृक्ष हुन्छन् कि तिनी धर्तीलाई ढाक्छन् अथवा बगैंचा जसको चारैतिर यति बाक्लो झाडी हुन्छ कि बाग-वृष्टिबाट ओझेल हुन्छ । यो जिन्न शब्दबाट लिइएको छ ।

ضِعْفَيْنِ ۚ فَإِن لَّمْ يُصِبْهَا وَابِلٌ فَطَلٌّ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٢٦٥﴾

दोब्बर उत्पन्न गर्छ र त्यसमा वर्षा नभएतापनि सिमसिम पानी नै प्रशस्त छ, र अल्लाह (तआला) तिम्रा कर्महरूलाई देखिराखेको छ ।

أَيَوَدُّ أَحَدُكُمْ أَن تَكُونَ لَهُ جَنَّةٌ مِّن نَّخِيلٍ وَأَعْنَابٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ لَهُ فِيهَا مِن كُلِّ الثَّمَرَاتِ وَأَصَابَهُ الْكِبَرُ وَلَهُ ذُرِّيَّةٌ ضُعَفَاءُ فَأَصَابَهَا إِعْصَارٌ فِيهِ نَارٌ فَاحْتَرَقَتْ ۗ كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ لَكُمُ الْآيَاتِ

(२६६) के तिमीमध्ये कुनै पनि व्यक्ति यो चाहन्छ कि त्यसको खजुर र अंगूरहरुको बगैंचा होउन्, जसमा नहरहरू बगिराखेका होऊन् र हरप्रकारको फल प्राप्त होस्, र त्यस व्यक्तिलाई वृद्ध अवस्था लागिसकेको छ, त्यसका निर्बल सन्तानहरू पनि छन् । र एक्कासि बागमा ठूलो बतास आओस् र त्यसमा आगो पनि होस् जसबाट बाग भस्म हुन पुगोस ।[1] यसैप्रकार अल्लाह (तआला) तिम्रा लागि निशानीहरू

---

जिन्न त्यस सृष्टिलाई भन्दछन्, जुन आँखाले देखिदैंन । गर्भमा भएका बच्चालाई "ज़नीन" भनिन्छ किनभने त्यो पनि देखिदैन । उन्मादलाई जुनून भनिएको छ किनभने यसबाट पनि बुद्धिमाथि आवरण पर्दछ र जन्नत (स्वर्ग) लाई जन्नत भन्दछन् किनकि यो दृष्टिगोचर छैन । ربوة अग्लो धर्तीलाई भन्दछन् । وابل ठूलो वर्षालाई भन्छन् ।

[1]यसै आडम्बरको हानिलाई स्पष्ट गर्न र त्यसबाट बच्नको लागि थप उदाहरण दिईदैछ कि एक व्यक्तिको बाग होस्, जसमा हरेक प्रकारका फल होउन् (अर्थात) त्यसबाट अधिक लाभको आशा होस् । त्यो व्यक्ति बुढो भएको होस् र त्यसका स-साना नानीहरू होउन् । (अर्थात) त्यो आफ्नो बृद्ध अवस्थाको कारण परिश्रम गर्न नसकोस् र उसको सन्तान पनि बृद्धावस्थाको सहारा त के भन्ने स्वयं आफ्नो बोझ उठाउने योग्य नहोस् । यस स्थितिमा तेज गतिको आँधि आओस् र त्यसको बगैंचा सखाप भएको होस् अब त त्यो न स्वयं बगैंचा लगाउने स्थितिमा रह्यो र न उसको सन्तान । यही स्थिति आडम्बरको लागि खर्च गर्नेहरूको कयामतको दिन हुनेछ । पाखण्ड एवं आडम्बरका कारण उनीहरूका सारा कर्म ब्यर्थ हुनेछन्, जबकि त्यहाँ पुण्यको अति आवश्यकता हुनेछ । र पुन: सत्कर्म गर्ने समय हुने छैन, अल्लाह तआला भन्नुहुन्छ कि के तिमी चाहन्छौ कि तिम्रो यही दशा होस् ? आदरणीय इब्ने अब्बासले यस उदाहरणको लक्ष्य ती व्यक्तिहरूलाई पनि भन्नुभएको छ, जो जीवनभरी पुण्यको कार्य गर्दछन्, परन्तु बृद्ध अवस्थामा शैतानको जालमा फँसेर अल्लाहको अवज्ञाकारी बन्दछन्, जसबाट जीवनभरिका पुण्य बर्बाद हुन्छ । (सहीह बुखारी उधृत फतहुल बदीर तथा इब्ने कसीर)

لَعَلَّكُمْ تَتَفَكَّرُونَ ﴿٢٦٦﴾

स्पष्ट रुपमा वर्णन गर्दछ, ताकि तिमी चिन्तन-मनन गर्न सक ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ أَنفِقُوا۟ مِن طَيِّبَٰتِ مَا كَسَبْتُمْ وَمِمَّآ أَخْرَجْنَا لَكُم مِّنَ ٱلْأَرْضِ ۖ وَلَا تَيَمَّمُوا۟ ٱلْخَبِيثَ مِنْهُ تُنفِقُونَ وَلَسْتُم بِـَٔاخِذِيهِ إِلَّآ أَن تُغْمِضُوا۟ فِيهِ ۚ وَٱعْلَمُوٓا۟ أَنَّ ٱللَّهَ غَنِىٌّ حَمِيدٌ ﴿٢٦٧﴾

(२६७) हे निष्ठावानहरू हो ! आफ्नो पवित्र आय मध्ये र धर्तीबाट तिम्रो निम्ति हामीले उमारेका कुराहरू मध्येबाट खर्च गर ।[1] तिनीमध्ये नराम्रो कुराहरूलाई खर्च गर्ने विचार नगर,जसलाई तिमी स्वयं ग्रहण गर्ने छैनौं, तर आँखा चिम्लिदिने अवस्था बाहेक[2] र जानीराख अल्लाह (तआ़ला) निस्पृह र प्रशंसनीय छ ।

ٱلشَّيْطَٰنُ يَعِدُكُمُ ٱلْفَقْرَ وَيَأْمُرُكُم بِٱلْفَحْشَآءِ ۖ وَٱللَّهُ يَعِدُكُم

(२६८) शैतानले तिमीलाई निर्धनताबाट तर्साउँछ, र अशिष्टताको आदेश दिन्छ ।[3]

[1]दानलाई स्वीकार गर्नको लागि आवश्यक छ कि उपकार र आडम्बरबाट शुद्ध रह, (जस्तो कि पछिल्ला आयतहरूमा भनिसकिएको छ । त्यसैप्रकार यो पनि आवश्यक छ कि त्यो उचित एवं शुद्ध कमाईबाट होस् । चाहे त्यो कारोबार (व्यापार अथवा उद्योगद्वारा) होस् अथवा कृषि र बगैंचाहरूको उत्पादनबाट र यो भन्नुभयो कि, "अपवित्र कुराहरूलाई दान गर्ने चेष्टा नगर ।" तसर्थ अपवित्र कुराहरूसित तात्पर्य त्यो कुरा छ, जुन अवैध कमाईबाट हुन्छ । अल्लाह (तआ़ला) त्यसलाई स्वीकार गर्दैन । हदीसमा छ (إِنَّ اللهَ طَيِّبٌ لا يَقْبلُ إلَّا طيباً) (अल्लाह तआ़ला पवित्र छ र त्यो पवित्र कुराहरूलाई स्वीकार गर्दछ) अर्को अपवित्रका अर्थ बेकार तथा प्रयोगमा नआउने कुराहरूसित छ । बेकार कुराहरू पनि अल्लाहको मार्गमा खर्च नगर । जस्तो कि आयत ﴿لَن تَنَالُوا۟ ٱلْبِرَّ حَتَّىٰ تُنفِقُوا۟ مِمَّا تُحِبُّونَ﴾ को पनि लाभ छ । यसको अवतरण हुने सम्बन्धमा भनिएको छ कि मदीनामा केही अन्सार खराब, प्रयोगमा नआउने खजूरहरूलाई दान स्वरुप मस्जिदमा दिएर जान्थे, जसपश्चात यो आयत उत्र्यो । (फ़तहुल क़दीर उधृत तिर्मिजी र इब्ने माजा़ आदि)

[2]अर्थात् जुन प्रकारले तिमी स्वयं बेकार कुरा लिन राम्रो ठान्दैनौ, त्यसैप्रकार अल्लाह तआ़लाको मार्गमा राम्रो कुरा नै खर्च गर ।

[3]अर्थात् यदि पुण्यको कार्यमा धन व्यय गर्नुछ, त शैतान यो भय उत्पन्न गराउँछ कि यसबाट तिमी निर्धन एवं भिखारी हुनेछौ । तर नराम्रो कार्यहरूमा व्यर्थ गर्नुमा यस्ता विचारहरूलाई निकट आउन दिँदैन बरु यी नराम्रा कुराहरूलाई यसप्रकार बनाई सिंगारी प्रस्तुत गर्दछ कि तिनका लागि लुकेका इच्छाहरू यसप्रकार जागृत हुन्छन् कि उनीमाथि मनुष्य ठूलोभन्दा ठूलो धन व्यय गरिदिन्छ । यसकारण यो देखिएको छ कि मस्जिद, मदरसाहरू र कुनै अन्य पुण्य कार्यको लागि यदि कोही

مَّغۡفِرَةً مِّنۡهُ وَفَضۡلًاؕ وَاللّٰهُ وَاسِعٌ عَلِيۡمٌ ۖۚ

र अल्लाह (तआ़ला) तिमीलाई आफ्नो क्षमा र कृपाको वचन दिन्छ। अल्लाह (तआ़ला) अति दयालु एवं सर्वज्ञ छ।

يُّؤۡتِي الۡحِكۡمَةَ مَنۡ يَّشَآءُ‌ۚ وَمَنۡ يُّؤۡتَ الۡحِكۡمَةَ فَقَدۡ اُوۡتِىَ خَيۡرًا كَثِيۡرًا‌ؕ وَمَا يَذَّكَّرُ اِلَّاۤ اُولُوا الۡاَلۡبَابِ

(२६९) त्यो जसलाई चाहन्छ, ज्ञान-बुद्धि दिन्छ। र जसलाई बुद्धिमत्ता दिइयो, निश्चय नै त्यसलाई थुप्रै भलाई (कल्याणकारी वस्तु) दिइयो।[1] र शिक्षा केवल बुद्धिमान नै प्राप्त गर्दछन्।

وَمَاۤ اَنۡفَقۡتُمۡ مِّنۡ نَّفَقَةٍ اَوۡ نَذَرۡتُمۡ مِّنۡ نَّذۡرٍ فَاِنَّ اللّٰهَ يَعۡلَمُهٗ‌ؕ وَمَا لِلظّٰلِمِيۡنَ مِنۡ اَنۡصَارٍ

(२७०) तिमी चाहे जति खर्च गर (अर्थात् दान गर) र चाहे जे भाकल मान,[2] त्यसलाई अल्लाह (तआ़ला) जान्दछ र अत्याचारीहरूको कोही सहायक छैन।

---

अनुदानको लागि पुग्दछ भने, धनवान मानिसहरु सय-दुईसयका लागि कैयन् पटक आफ्नो लेखा-जोखाको अवलोकन गर्दछन् माँग्नेवाला लामो समयसम्म प्रतीक्षा गरी कहिलेकाहीं कैयौपटक दगुर्छन् तर त्यही व्यक्ति सिनेमा, टेलिभिजन, शराब, कुकर्म र मुद्दाहरू आदिमा त आफ्नो धन विना सोचिसम्भी खर्च गर्दछ र यसबाट कुनै प्रकारको सकोच वा हिच्किचाहटको प्रदर्शन हुँदैन।

[1]बुद्धिमत्ता केही धर्मगुरुहरूका निकट समझ-बुझ र ज्ञान तथा केहीका निकट राम्रो सल्लाह, कुरआनद्वारा रोकिएका कुराहरूको ज्ञान र समझ, निर्णायक शक्ति र केहीका निकट केवल किताब र सुन्नतको ज्ञान र समझ हो। अथवा यी सबै मत त्यसको परिधिमा सम्मिलित हुन सक्छन्। सहीहैनको एक हदीसमा छ कि दुई व्यक्तिहरूमा प्रतिस्पर्धा उचित छ, एक त्यो जसलाई अल्लाहले धन दियो र त्यो त्यसलाई अल्लाहको मार्गमा व्यय गर्दछ। दोस्रो त्यो जसलाई अल्लाहले बुद्धिमत्ता प्रदान गऱ्यो, जसबाट त्यो निर्णय गर्दछ र मानिसहरूलाई त्यसको शिक्षा दिन्छ। (सहीह बुखारी किताबुल इल्म)

[2]मनौती अथवा भाकलको अर्थ हो कि मेरो अमुक कार्य पुरा होस् अथवा अमुक दुख निवारण हुनेछ भने म अल्लाहको मार्गमा यति दान गर्नेछु। यस मनौति (भाकल) लाई पूरा गर्नु आवश्यक छ। अथवा अनुचित कार्यको भाकल मानेको छ भने त्यसलाई पूरा गर्न आवश्यक छैन। भाकल पनि नमाज़ र रोज़ाको जस्तै बन्दना हो, यसकारण अल्लाहको अतिरिक्त कुनै अरुको भाकल मान्नु त्यसको पूजा हो, जुन शिर्क हो, जस्तो कि आजकल प्रसिद्ध मजार (चिहान) हरूमा भाकल भेट चढाउनुको यो कार्य सामान्य छ। अल्लाह (तआ़ला) यस शिर्कबाट बचाओस्।

(२७१) यदि तिमीहरू दान-पुण्य प्रकटरुपले गर्दछौ भने त्यो पनि राम्रो कुरो हो र यदि तिमी त्यसलाई लुकाएर निर्धनहरूलाई दिन्छौ, भने त्यो तिम्रो लागि श्रेष्ठकर छ ।[1] अल्लाह (तआ़ला) ले तिम्रा पाप समाप्त गरिदिनेछ र अल्लाह (तआ़ला) तिम्रा सम्पूर्ण कर्महरूसित अवगत छ ।

إِن تُبْدُوا الصَّدَقَاتِ فَنِعِمَّا هِيَ ۖ وَإِن تُخْفُوهَا وَتُؤْتُوهَا الْفُقَرَاءَ فَهُوَ خَيْرٌ لَّكُمْ ۚ وَيُكَفِّرُ عَنكُم مِّن سَيِّئَاتِكُمْ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿٢٧١﴾

(२७२) (हे मुहम्मद!) उनीहरूलाई सत्य-मार्गमा ल्याइ उभ्याउनु तिम्रो अधिकारमा छैन, बरु मार्गदर्शन अल्लाह (तआ़ला) दिन्छ जसलाई चाहन्छ, र तिमी जुन असल कुरो अल्लाहको मार्गमा खर्च गर्दछौं त्यसको लाभ स्वयं पाउनेछौ । तिमीले मात्र अल्लाह (तआ़ला) को प्रसन्नता प्राप्त गर्नलाई खर्च गर्नुपर्दछ। तिमी जुन धन खर्च गर्नेछौ, त्यसको पूरा-पूरा प्रतिफलहरू तिमीलाई दिइनेछ [2] तथा तिम्रो अधिकार हनन गरिने छैन ।

لَّيْسَ عَلَيْكَ هُدَاهُمْ وَلَٰكِنَّ اللَّهَ يَهْدِي مَن يَشَاءُ ۗ وَمَا تُنفِقُوا مِنْ خَيْرٍ فَلِأَنفُسِكُمْ ۚ وَمَا تُنفِقُونَ إِلَّا ابْتِغَاءَ وَجْهِ اللَّهِ ۚ وَمَا تُنفِقُوا مِنْ خَيْرٍ يُوَفَّ إِلَيْكُمْ وَأَنتُمْ لَا تُظْلَمُونَ ﴿٢٧٢﴾

[1]यसबाट ज्ञात भयो कि सामान्य स्थितिमा लुकाएर दान गर्नु श्रेष्ठ छ, यसबाहेक जबकि कुनै विशेष परिस्थितिमा भनेर दान गर्नाले अन्य व्यक्तिहहरूलाई शिक्षा दिनुछ। यदि आडम्बरको सम्भावना छैन भने यस कार्यमा प्राथमिकता देखाउनेहरू जुन श्रेष्ठता प्राप्त गर्न सक्दछन्, त्यो हदीसहरूबाट स्पष्ट छ । यसप्रकारका विशेष परिस्थितिहरूका अतिरिक्त गुप्त दान नै श्रेष्ठ छ। नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो: कि जुन व्यक्तिहरूलाई केयामतका दिन अर्शे-इलाहीको (सिंहासन) छायाँको सौभाग्य प्राप्त हुनेछ, तिनीहरूमा एक व्यक्ति त्यो पनि हुनेछ, जसले यसप्रकार गुप्तदान गरेको हुनेछ कि त्यसको बायाँ हातलाई थाहा हुने छैन कि त्यसको दाहिने हातले के खर्च (दान) गरेको छ। दानमा गुप्तराख्ने कुराको श्रेष्ठतालाई केही आलिमहरूले (धर्मगुरु) स्वेच्छात्माक दानसम्म सीमित राखेका छन्, परन्तु ज़कात (निर्धारित दानलाई) स्पष्ट गर्न श्रेष्ठ ठानेका छन् । परन्तु कुर्आनको मान्यता अनिवार्य तथा स्वेच्छात्मक दुबै दानलाई सम्मिलित छ (इब्ने कसीर) र हदीसको भावार्थ पनि यसको पक्षधर छ ।

[2]ब्याख्याको वृत्तान्तमा यसको अवतरण हुने कारण यो वर्णित गरिएको छ कि मुसलमान आफ्ना मूर्तिपूजक सम्बन्धिहरूको सहायता गर्न उचित ठान्दैनथे र उनीहरू चाहन्थे कि ती पनि मुसलमान भइहालून् ।

(२७३) दानका पात्र मात्र ती निर्धन छन् जो अल्लाहको मार्गमा रोकिए, र जो धर्तीमा भर्मण गर्न सक्दैन ।[१] मूर्ख व्यक्तिहरू, उनीहरुले प्रश्न नगर्नुको कारण, उनीहरूलाई धनवान ठान्दछन्, तिमीले उनको अनुहार हेरेर ज्ञानले उनीहरूलाई चिन्न सक्छौं, उनीहरू मानिसहरूसित टाँसिएर भिक्षा माँग्दैनन् ।[२] तिमी जे-जति धन खर्च गर्दछौ, अल्लाह (तआला) त्यसलाई राम्ररी जान्दछ ।

لِلْفُقَرَآءِ الَّذِيْنَ اُحْصِرُوْا فِيْ سَبِيْلِ اللّٰهِ لَا يَسْتَطِيْعُوْنَ ضَرْبًا فِى الْاَرْضِ يَحْسَبُهُمُ الْجَاهِلُ اَغْنِيَآءَ مِنَ التَّعَفُّفِ تَعْرِفُهُمْ بِسِيْمٰهُمْ لَا يَسْــَٔلُوْنَ النَّاسَ اِلْحَافًا وَمَا تُنْفِقُوْا مِنْ خَيْرٍ فَاِنَّ اللّٰهَ بِهٖ عَلِيْمٌ ﴿٢٧٣﴾

[१]अल्लाह तआलाले आदेश गऱ्यो कि मार्गदर्शन गर्नु मात्र अल्लाहको अधिकारमा छ । दोस्रो कुरो यो आदेश गऱ्यो कि तिमी अल्लाहको प्रसन्नताको लागि जे-जति पनि खर्च गर्नेछौ, त्यसको पूरा फल तिमीले पाउनेछौ । यसबाट यो ज्ञात भयो कि जो सम्बन्धी मुसलमान छैनन्, उनीसँग पनि नम्रताको व्यवहार गर्नु पुण्यको कार्य हो परन्तु ज़कात केवल मुसलमानको अधिकार हो, यसलाई कुनै पनि अन्य व्यक्तिलाई दिन सकिदैन जो मुसलमान होइन ।[१] यसबाट तात्पर्य ती मोहाजिर हुन् जो मक्काबाट मदीना आए र अल्लाहको मार्गमा आउनको कारण उनको प्रत्येक कुरो छुट्यो । यस परिधिमा धर्मको शिक्षा प्राप्त गर्ने विद्यार्थी र आलिम (धार्मिक शिक्षक) पनि आउँछन् ।

[२]अर्थात् जो ईमान ल्याएका छन्, उनको विशेषता यो हो कि उनी निर्धनता एवं गरीबीको परिस्थितिमा कसैको अगाडि हात फैलाएर भिक्षा माँग्नुबाट पन्छिन्छन् । तथा कोहीसित टाँसिएर कदापि प्रश्न गर्दैनन् । (किनभने यसको पहिलो विशेषता प्रश्न गर्नबाट तर्कनु हो) (फ़तहुल क़दीर) र केही ज्ञानीहरूले भने कि उनी भिक्षाको समय रूने गर्दैनन् र जुन कुराहरूको उनीहरूलाई आवश्यकता हुँदैन, त्यसको माग गर्दैनन् यसकारण कि إلحاف को अर्थ यो हो कि आवश्यकता नभएपछि पनि (व्यवसायको रूपमा) मानिसहरूसित माग्दछन्, यस भावार्थको पुष्टि हदीसबाट हुन्छ, जसमा भनिएको छ कि,“गरीब त्यो होइन, जो एक-एक, दुई-दुईवटा गाँसको लागि दैलो-दैलो गई प्रश्न गर्दछ । गरीब त त्यो हो जो प्रश्न गर्नबाट पन्छिन्छ ।” अनि नबी सल्लल्लाहु अलैहि वसल्लमले आयत ﴿لَا يَسْــَٔلُوْنَ النَّاسَ اِلْحَافًا﴾ (को उदाहरण दिनुभयो) (सहीह बुख़ारी, तफ़सीर वअल-ज़कात) यसकारण व्यवसायिक भिक्षुहरूका अतिरिक्त धर्मको शिक्षा प्राप्त गर्नको लागि हिज़रत गर्ने विद्यार्थी, आलिमहरू र किम्ती पोशाक लगाउने मानिसहरूको खोज गरी, जसलाई आवश्यकता त छ, तर कसैको अगाडि हात फैलाउन चाहँदैनन्, सहायता गर्नुपर्छ । यसबाहेक हदीसमा आएको छ कि जसको पासमा यति सम्पत्ति छ, जुन त्यसको

اَلَّذِيْنَ يُنْفِقُوْنَ اَمْوَالَهُمْ بِالَّيْلِ وَ النَّهَارِ سِرًّا وَّ عَلَانِيَةً فَلَهُمْ اَجْرُهُمْ عِنْدَ رَبِّهِمْ ۚ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿٢٧٤﴾

(२७४) जुन मानिसहरू आफ्नो सम्पत्ति र ातदिन लुकाएर अथवा खुल्ला रुपले खर्च गर्दछन्, उनीहरूका लागि उनीहरूका प्रभुको पासमा प्रतिफल छ, उनीहरूलाई न कुनै भय छ र न कुनै शोक नै ।

اَلَّذِيْنَ يَاْكُلُوْنَ الرِّبٰوا لَا يَقُوْمُوْنَ اِلَّا كَمَا يَقُوْمُ الَّذِىْ

(२७५) ब्याज खाने[1] मानिसहरू त्यसरी नै उभिने छन्, जसरी त्यो उभिने छ,

जीवनयापनको लागि प्रशस्त छ, तर यसको उपरान्त त्यो मानिसहरूको अगाडी हात फैलाउँछ, त कयामतको दिन त्यसको अनुहार रगतले रक्तम्य हुनेछ । (विवरण अहलुस-सुनन, अल-अरबा, तिर्मिजी, किताबुल जकात)

[1] ربوا को अर्थ शब्दकोषमा अधिकता तथा बढोत्तरी छ। र धार्मिक नियमहरूमा यसलाई ब्याज भन्दछन्। यसका दुईभाग यसप्रकार छन्। एक रिबा-फज्ल र दोस्रो रिबा-नसीअः प्रथम जुन छ : वस्तुहरूमा कमी अथवा अधिकता अथवा नगद-ऋणको कारणले हुन्छ। जसको विवरण हदीसमा छ। जस्तै गहुँको साटो गहुँसित गर्नु, यसको लागि भनिएको छ कि बराबर -बराबर होस्। दोस्रो हात-हातै होस्। यसमा कमी अथवा अधिकता हुन्छ भने तैपनि अरु हात-हातै हुनको अतिरिक्त एक नगद अर्को उधारो अथवा दुबै नै उधार हुन्छ, तैपनि ब्याज हुन्छ। रिबा "नसीया" को अर्थ हो, केसैलाई जस्तो छ महिनाको लागि सय रुपैयाँ यस शर्तमा दिनु कि फिर्ता एक सय पचीस रुपैयाँ हुनेछ। पचीस रुपैयाँ छ महिनाको छुटको लागि लिइयोस् अली (رضی اللہ عنہ) बाट सम्बन्धित वाक्यमा यसलाई यसप्रकार वर्णित गरिएको छ, «كُلُّ قَرْضٍ جَرَّ مَنْفَعَةً فَهُوَ رِبًا» (ऋणमा लिइएको लाभ ब्याज हो) यो ऋण आफ्नो आवश्यकताको लागि लिइएको होस् अथवा ब्यवसायको लागि दुबैप्रकारका ऋणमा लाभ (ब्याज) हराम (अवैध) छ। अशिक्षित कालमा यसप्रकारका दुबै ऋणहरूको प्रचलन थियो। धार्मिक नियमले दुबैमा कुनै प्रकारको भेद नगरीकन दुबै प्रकारले प्राप्त ब्याजलाई कठोरताका साथ हराम भन्नु भएको छ। यसकारण केही व्यक्तिहरूको यो भनाई छ कि ब्यवसायको लागि लिइएको ऋण (जो सामन्यत बैंकहरूबाट लिइन्छ) यसमा लिइएको अधिक धन ब्याज होइन, यसकारण कि ऋण लिनेवाला यसबाट लाभ उठाउँछ। त्यसको केही भाग त्यो बैंकलाई अथवा ऋण दिनेवालालाई फर्काइदिन्छ भने यसमा के अनुचित छ? यसमा कठिनाई ती नयाँ विचारकहरूलाई देखिदैन जो ब्याजलाई उचित सिद्ध गर्न चाहन्छ, अन्यथा धार्मिक नियममा त यसमा बडो कठिनाई छ। जस्तै ऋण लिएर ब्यवसाय गर्नेवालालाई त्यस ब्यवसायबाट लाभ हुनु आवश्यक छैन। कैयौं पटक ब्यवसायमा लगाइएको सारा धन डुबेर जान्छ, जबकि यसको विपरीत ऋण दिनेवाला (चाहे बैङ्क होस् वा कुनै साहू-महाजन) त्यसको लाभ निर्धारित छ, जसको भुक्तानी प्रत्येक स्थितिमा अनिवार्य छ। त्यो अत्याचारको स्पष्ट प्रमाण हो, भनेपछि इस्लामी धर्म नियमहरू कसरी त्यसलाई उचित भन्न सक्दछन्?

يَتَخَبَّطُهُ الشَّيْطٰنُ مِنَ الْمَسِّ ۭ ذٰلِكَ بِاَنَّهُمْ قَالُوْٓا اِنَّمَا الْبَيْعُ مِثْلُ الرِّبٰوا ۘ وَاَحَلَّ اللّٰهُ الْبَيْعَ وَحَرَّمَ الرِّبٰوا ۭ فَمَنْ جَاۗءَهٗ مَوْعِظَةٌ مِّنْ رَّبِّهٖ فَانْتَهٰى فَلَهٗ مَا سَلَفَ ۭ وَاَمْرُهٗٓ اِلَى اللّٰهِ ۭ وَمَنْ عَادَ فَاُولٰۗىِٕكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ

जसलाई शैतानले छोएर बौलाहा बनाईदिन्छ।[1] यसकारण कि यिनीहरूले भन्ने गर्थे कि ब्यापार पनि त ब्याज समान छ।[2] जबकि अल्लाह (तआलाले) ब्यापारलाई हलाल (बैध) गऱ्यो र ब्याजलाई हराम (अबैध) र जो ब्यक्ति आफ्नो पासमा आएको अल्लाह (तआला) को शिक्षा सुनेर कार्य त्यागछ, त्यसको लागि त्यो छ, जुन व्यतीत भयो।[3] र उसको मामिला अल्लाह (तआला) को पासमा छ[4] र जो पुन: (हरामतिर) फर्क्यो त्यो नरकवासी हो, उनीहरू सधैंभरि त्यसैमा रहनेछन्।

बरु धार्मिक नियम त निष्ठावानहरूलाई समाजका ती ब्यक्ति जसलाई सहायताको आवश्यकता छ, बिना कुनै सांसारिक लाभको कामना गरी, यसप्रकारका मानिसहरूलाई सहायता गर्ने कुरोमा जोड दिन्छ, जसबाट समाजमा भातृत्व, प्रेम, सहायता, आदर एवं सम्मानको भावना उत्पन्न होस्, यसको विपरीत ब्याजको यस नियमले कठोर ता र स्वार्थलाई प्रोत्साहन हुन्छ। एउटा धनवानलाई आफ्नो धनबाट लाभको इच्छा हुन्छ, चाहे समाजका ती मानिसहरू, रोग, भोक र निर्धनताबाट पीडित नै किन होउन् अथवा बेरोजगार हुनको करण आफ्नो जीवनसित मोह नहोस्। धार्मिक नियम यस कठोरता तथा अत्याचारलाई कसरी रुचाउन सक्छ? यसका अझै धेरै अन्य हानिहरू छन्, यहाँ विस्तारको आवश्यकता छैन। अत: ब्याज बिल्कुल हराम (अबैध) छ, चाहे ब्याज व्यक्तिगत (आफ्नो आवश्यकताको लागि लिएको ऋणमा ब्याज) होस् अथवा संस्थागत ब्याज (ब्यवसायिक कार्यमा लिएको ऋणमा ब्याज) होस्।

[1]ब्याज लिनेको यो स्थिति चिहानबाट उभिने समय अथवा प्रलयको मैदानमा हुनेछ।

[2]हाँलाकि ब्यापारमा त धन सामाग्रीको परस्पर लेनदेन भईनै रहन्छ। दोस्रो यसमा लाभ-हानिको सम्भावना रहन्छ, जबकि ब्याजमा यी दुबै कुरा हुँदैनन्। अत: अल्लाहले बेच्नलाई वैध र ब्याजलाई अबैध भनेको छ। अनि यी दुबै एउटै कसरी हुन सक्छन्?

[3]ईमान स्थापित गरे पश्चात तथा क्षमा माँगे पश्चात पछिल्ला ब्याज लिएको कुरोमा पकड हुने छैन।

[4]कि त्यो क्षमा माँगे पश्चात अडिग रहन्छ अथवा फेरिबाट कु-कर्म तथा कुविचार को कारण त्यसलाई त्यसको स्थितिमा छाडिदिन्छन्। यसकारण पुन: ब्याज लिनेलाई कठोर दण्डको धम्की छ।

يَمْحَقُ اللَّهُ الرِّبَوٰا وَيُرْبِي الصَّدَقَٰتِ ۗ وَاللَّهُ لَا يُحِبُّ كُلَّ كَفَّارٍ أَثِيمٍ ﴿٢٧٦﴾

(२७६) अल्लाह (तआला) ले ब्याजलाई मेटाउने र दानलाई बढाउनेछ।[1] र अल्लाह (तआला) कुनै कृतघ्न एवं पापीलाई मित्र बनाउँदैन।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّٰلِحَٰتِ وَأَقَامُوا الصَّلَوٰةَ وَآتَوُا الزَّكَوٰةَ لَهُمْ أَجْرُهُمْ عِندَ رَبِّهِمْ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٢٧٧﴾

(२७७) जुन व्यक्तिहरू ईमानका साथ (सुन्नत अनुसार) काम गर्दछन्, नमाज़लाई स्थापित गर्दछन् र ज़कात दिन्छन्, तिनीहरूको फल तिनीहरूको पालनकर्तासँग रहेको छ, उनीहरूलाई न त कुनै भय हुनेछ र न कुनै दुःख।

يَٰٓأَيُّهَا الَّذِينَ آمَنُوا اتَّقُوا اللَّهَ وَذَرُوا مَا بَقِيَ مِنَ الرِّبَوٰٓا إِن كُنتُم مُّؤْمِنِينَ ﴿٢٧٨﴾

(२७८) हे निष्ठावानहरू ! अल्लाह तआलासित डर मान्दै गर। अनि जुन ब्याज बाँकी छ त्यसलाई छाडिदेउ यदि तिमी साँच्चिकै निष्ठावान् हौ।

فَإِن لَّمْ تَفْعَلُوا فَأْذَنُوا بِحَرْبٍ مِّنَ اللَّهِ وَرَسُولِهِۦ ۖ وَإِن تُبْتُمْ فَلَكُمْ رُءُوسُ أَمْوَٰلِكُمْ لَا تَظْلِمُونَ وَلَا تُظْلَمُونَ ﴿٢٧٩﴾

(२७९) अतः यदि यस्तो गर्दैनौं भने अल्लाह (तआला) र त्यसका रसूलसित युद्धका लागि तयार होऊ।[2] र यदि क्षमा माँगदछौ भने तिम्रो मूलधन तिम्रै हुनेछ, न तिमीहरू अत्याचार गर न तिमीमाथि अत्याचार गरियोस्।[3]

[1]यो ब्याजको वास्तविक एवं आत्मिक हानि पश्चात दानका लाभहरूको विवरण हो। ब्याजमा हेर्दाखेरी वढोत्तरी हुन्छ, परन्तु त्यसको आध्यात्मिक अर्थ अनुसार परिणाम स्वरुप ब्याजको धन त्यसको बरबादी एवं बिगाडको कारण बन्दछ। यस कुराको समर्थन अब पाश्चात्य देशका अर्थशास्त्रीहरू पनि गर्न थालेका छन्।

[2]यो यस्तो कडा चेतावनी हो, जुन कुनै अन्य अपराधको सम्बन्धमा आएको छैन। यसकारण आदरणीय अब्दुल्लाह बिन अब्बासले भन्नुभएको छ कि यदि कुनै व्यक्ति इस्लामी राज्यमा ब्याज त्याग्न तयार छैन भने समयको राज्य प्रमुखको दायित्व छ कि त्यसबाट क्षमा-याचना गराओस्। (किनभने त्यो अल्लाह तथा रसूलसित युद्धको घोषणा गरिराखेको छ) तथा नरोकिएको अवस्थामा त्यसको घाँटी काटिदेओस्। (इब्ने कसीर)

[3]तिमी यदि मूलधनभन्दा अधिक धन असूल गर्नेछौ भने यो तिम्रो अत्याचार हुनेछ र यदि तिमीलाई मूलधन दिईदैन भने त्यो तिमीमाथि अत्याचार हुनेछ।

وَإِنْ كَانَ ذُو عُسْرَةٍ فَنَظِرَةٌ إِلَىٰ مَيْسَرَةٍ ۚ وَأَنْ تَصَدَّقُوا خَيْرٌ لَكُمْ ۖ إِنْ كُنْتُمْ تَعْلَمُونَ ﴿٢٨٠﴾

(२८०) र यदि कोही निर्धन छ भने त्यसलाई सुविधासम्म समय दिनुपर्छ । तथा दान गरिदिन्छौ भने तिम्रो लागि अति श्रेष्ठ छ,[1] यदि तिमीमा ज्ञान छ भने ।

وَاتَّقُوا يَوْمًا تُرْجَعُونَ فِيهِ إِلَى اللَّهِ ۖ ثُمَّ تُوَفَّىٰ كُلُّ نَفْسٍ مَا كَسَبَتْ وَهُمْ لَا يُظْلَمُونَ ﴿٢٨١﴾

(२८१) र त्यस दिनसित तर्स, जसमा तिमी सबै (अल्लाह तआला) तिर फर्काइनेछौ र प्रत्येक व्यक्तिलाई त्यसको कर्मअनुसार पूरा-पूरा प्रतिफल दिइनेछ र उनीमथि अत्याचार गरिने छैन ।[2]

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا تَدَايَنْتُمْ بِدَيْنٍ إِلَىٰ أَجَلٍ

(२८२) हे ईमानवालाहरू ! जब तिमीहरूले निर्धारित अवधिका लागि एक-अर्कासित लेनदेन गर्छौ तब त्यसलाई लेख्ने गर ।[3]

[1]अज्ञान कालमा ऋणलाई भुक्तानी नगर्नका कारण ब्याजमाथि ब्याजले मूलधनमा यति बृद्धि हुन्थ्यो कि एउटा सानो मूलधन एउटा पर्वत बन्न पुग्दथ्यो, जसको भुक्तानी गर्न असम्भव हुने गर्दथ्यो । अल्लाह तआलाले आदेश दियो कि यदि कोही निर्धन छ भने (ब्याज त लिनै हुन्न तथा मूलधन लिनमा पनि) सरलताले त्यसलाई भुक्तानी गर्न समय दिनुपर्छ र यदि ऋण क्षमा गरिदिन्छौ भने यो झन् श्रेष्ठ छ । हदीसमा पनि यसको श्रेष्ठताको वर्णन गरिएको छ कति अन्तर छ दुबै नियमहरूमा सहायताको ? एउटा पूर्णरुपले कठोरता, अत्याचार र स्वार्थी नियम र दोस्रो प्रेम सहानुभूति र एक-अर्काको सहायताको नियम । मुसलमान यदि स्वयं यस कृपालु र कल्याणकारी अल्लाहका नियमहरूमा चल्दैन भने यसमा इस्लामको के दोष ? र अल्लाहमाथि के आक्षेप ? काश, मुसलमान आफ्नो धर्मको महत्व र सार्थकतालाई बुझ्न सकोस् र त्यसमा आफ्नो जीवनधारलाई प्रभावित गर्न सकोस् ।

[2]केही कथनानुसार यो नबी करीम सल्लल्लाहु अलैहि वसल्लममाथि अवतरित अन्तिम आयत (श्लोक हो) जस पश्चात उहाँको निधन भयो ।

[3]जब ब्याजका नियमहरूको कठोरताले निषेध गरियो र दान दिनमा जोड दिइयो तब फेरि यस्तो समाजमा ऋणको आवश्यकता विशेषरुपले भयो किनभने ब्याज त त्यसै नै वर्जित छ, र प्रत्येक व्यक्ति त्यति दान गर्न सक्दैन तथा हर व्यक्ति आफ्नो सम्मानको कारण दान लिनु रुचाउँदैन तब यस्तोमा केवल ऋण लिनुपर्छ । यसैकारण हदीसमा ऋण दिनमा ठूला पुण्य वर्णित गरिएका छ । यसलाई दिन आनाकानी र आलस्यका कारण झै-झगडा पनि हुनसक्छ ।

مُّسَمًّى فَاكْتُبُوهُ ۚ وَلْيَكْتُب بَّيْنَكُمْ كَاتِبٌ بِالْعَدْلِ ۚ وَلَا يَأْبَ كَاتِبٌ أَن يَكْتُبَ كَمَا عَلَّمَهُ اللَّهُ ۚ فَلْيَكْتُبْ وَلْيُمْلِلِ الَّذِي عَلَيْهِ الْحَقُّ وَلْيَتَّقِ اللَّهَ رَبَّهُ وَلَا يَبْخَسْ مِنْهُ شَيْئًا ۚ فَإِن كَانَ الَّذِي عَلَيْهِ الْحَقُّ سَفِيهًا أَوْ ضَعِيفًا أَوْ لَا يَسْتَطِيعُ أَن يُمِلَّ هُوَ فَلْيُمْلِلْ وَلِيُّهُ بِالْعَدْلِ ۚ وَاسْتَشْهِدُوا شَهِيدَيْنِ مِن رِّجَالِكُمْ ۖ فَإِن لَّمْ يَكُونَا رَجُلَيْنِ فَرَجُلٌ وَامْرَأَتَانِ مِمَّن تَرْضَوْنَ مِنَ الشُّهَدَاءِ أَن تَضِلَّ إِحْدَاهُمَا

र लेखनदासलाई आवश्यक छ कि आपसी विषय न्यायपूर्वक लेखोस्, तथा कुनै लेखनदासले लेख्न अस्वीकार नगरोस्, जस्तो अल्लाह (तआ़ला) ले त्यसलाई सिकाएको छ, त्यसैप्रकार उसले लेखिदिनुपर्छ र जसमाथि अधिकार छ, (अर्थात ऋणिले) त्यसले लेखाओस् ।[1] र आफ्नो अल्लाह (तआ़ला) सित तर्सोस् जो उसको प्रभु हो । र अधिकारबाट केही नघटाओस्, यदि जुन व्यक्तिमाथि अधिकार छ, त्यो अशिक्षित छ अथवा दुर्बल छ अथवा लेखाउने शक्ति नभएको छ भने त्यसको संरक्षकले न्याय पूर्वक लेखाइदेओस् र आफूमध्ये दुई पुरुषहरूलाई साक्षी राख, यदि दुई पुरुष छैनन् भने एक पुरुष, दुई स्त्रीहरू जसलाई तिमी साक्षीको रुपमा मान्छौ ।[2]

यसकारण यस आयतमा जसलाई आयत दैन भनिन्छ कुर्आनको सबभन्दा लामो आयत हो । अल्लाह तआ़लाले ऋणको लागि आवश्यक निर्देश दिएका छन् ताकि अनिवार्य आवश्यकता झगडाको कारण नबनोस् । यसको लागि एउटा आदेश यो दिइयो कि अवधि निर्धारित गर दोस्रो यो कि यसलाई लेख, तेस्रो यो कि यसमा दुई मुसलमान पुरुष अथवा एक पुरुष अथवा दुई स्त्रीहरुलाई साक्षी बनाऊ ।

[1]यसबाट तात्पर्य ऋणी छ अर्थात त्यो अल्लाहसित तर्सदैं धनलाई लेखाओस्, यसमा कमी नगरोस् । अगाडि गएर भनिंदैछ कि यदि यो ऋणी मन्द बुद्धि भएको अथवा कमजोर बच्चा अथवा पागल छ भने त्यसको संरक्षकलाई आवश्यक छ कि न्यायसँग लेखाओस् ताकि ऋणी (ऋण दिनेवाला) लाई हानि नहोस् ।

[2]अर्थात् जसको धार्मिकता तथा न्यायप्रियतामाथि तिमीलाई विश्वास होस् । यसका अतिरिक्त कुर्आन करीमका यी सूत्रहरुबाट यो ज्ञात भयो कि दुई स्त्रीहरूको साक्ष्य एउटा पुरुषको समान छ तथा पुरुषबिना स्त्रीहरूको साक्ष्य उचित छैन, ती समस्याहरूका अतिरिक्त जसमा स्त्रीको अतिरिक्त कसैलाई ज्ञान हुन सक्दैन, यस मतमा मतभेद छ कि बाद (मुद्दयी) को एक प्रतिज्ञाको साथ दुई स्त्रीहरूको साक्ष्य निर्णय गर्नु उचित छ अथवा छैन ? जुन प्रकार एक पुरुषको साक्ष्य पश्चात निर्णय गर्नु उचित छ, जबकि दोस्रो साक्षीको स्थानमा वादी शपथ लिएर भनोस् । परन्तु हन्फी धर्माचार्यहरूका निकट यो उचित छैन जबकि हदीसका ज्ञाताहरू यसका पक्षमा छन्, किनभने हदीसबाट एक साक्षी र शपथको साथ निर्णय गर्ने कुरोको

फَتُذَكِّرَ إِحْدَاهُمَا الْأُخْرَىٰ ۚ وَلَا يَأْبَ الشُّهَدَاءُ إِذَا مَا دُعُوا ۚ وَلَا تَسْأَمُوا أَنْ تَكْتُبُوهُ صَغِيرًا أَوْ كَبِيرًا إِلَىٰ أَجَلِهِ ۚ ذَٰلِكُمْ أَقْسَطُ عِنْدَ اللَّهِ وَأَقْوَمُ لِلشَّهَادَةِ وَأَدْنَىٰ أَلَّا تَرْتَابُوا ۖ إِلَّا أَنْ تَكُونَ تِجَارَةً حَاضِرَةً تُدِيرُونَهَا بَيْنَكُمْ فَلَيْسَ عَلَيْكُمْ جُنَاحٌ أَلَّا تَكْتُبُوهَا ۗ وَأَشْهِدُوا إِذَا تَبَايَعْتُمْ ۚ وَلَا يُضَارَّ كَاتِبٌ وَلَا شَهِيدٌ ۚ وَإِنْ تَفْعَلُوا فَإِنَّهُ

ताकि एकको भूलचुकलाई अर्कोले स्मरण गराओस्[1] र साक्षीहरूलाई आवश्यक छ कि जब उनीहरू बोलाइन्छन्, तब अस्वीकार नगरुन्, तथा ऋणलाई जसको अवधि निर्धारित छ, चाहे सानो होस् अथवा ठूलो होस्, लेख्नमा सुस्ती नगर । अल्लाह तआ़लाको निकट यो कुरो धेरै न्यायोचित छ । र साक्षीहरूका लागि बढी उपयुक्त र शंकाबाट पनि बचाउने धेरै उपयोगी छ ।[2] र यो कुरो बेग्लै छ कि त्यो मामिला नगद ब्यापारको रुपमा होस् जुन आपसमा लेनदेन गरिराखेका छौ, तब तिमीहरूप्रति त्यसलाई नलेख्नुमा कुनै पाप छैन तथा क्रय-विक्रयको समयमा साक्षी निर्धारित गर्ने गर[3]

निर्णय गर्ने कुरोको पुष्टि हुन्छ, र जब दुई स्त्रीहरु एक पुरुषको साक्ष्यको बराबर छन् भने दुई स्त्रीहरु र शपथको साथ निर्णय गर्नु उचित हुनेछ । (फतहुल क़दीर)

[1]यो एक पुरुषको सापेक्ष दुई स्त्रीहरूलाई निर्धारित गर्नुको विशेषता एवं बुद्धिमत्ता हो अर्थात स्त्री बुद्धि र याद राख्नमा पुरुषभन्दा कमजोर छ । (जस्तो कि सहीह मुस्लिमको एक हदीसमा स्त्रीलाई मन्द बुद्धि भनिएको छ) यो स्त्रीहरूको अधिकारहरूको हनन तथा अपमानको सूचक होइन, (जस्तो कि केही मानिसहरू भन्दछन्) बरु उनीहरूको प्राकृतिक क्षीर्णताको वर्णन हो, जुन अल्लाह तआ़लाको ज्ञान एवं इच्छामा आधारित छ । अहङ्कारको कारण कोही यसलाई स्वीकार गर्दैन भने अर्कै कुरा हो, परन्तु वास्तविकता एवं घटनाहरूको आधारमा यसको खण्डन गर्न सकिदैन ।

[2]लेख्नुको लाभ यो हो कि यसबाट न्यायको माँग पूरा हुनेछ । साक्ष्य पनि सही हुनेछ (कि साक्षीको उपस्थिति नहुने अथवा मृत्यु पश्चात उनका लेखिएका लेख साक्ष्य बन्ने छन्) र कुनै प्रकारको शंकाबाट दुबै पक्षहरु सुरक्षित रहनेछन्, किनभने शंका हुनुको स्थितिमा लेखे, हेरेपछि शंका समाप्त हुनेछ ।

[3]यो त्यो क्रय-विक्रय हो जसमा ऋण होस् अथवा सौदा भए पश्चात पनि विचलनको सम्भावना होस्, नत्र यसबाट पूर्व नगद सौदालाई लेख्नुबाट अलग्ग गरिसकिएको छ । केही विद्वानहरूले यस विक्रयबाट घर र पसल, बगैंचा अथवा पशुको विक्रयको अर्थ लिएका छन् । (ऐसरुत्तफ़ासीर)

فُسُوقٌۢ بِكُمْ ؕ وَاتَّقُوا اللّٰهَ ؕ وَيُعَلِّمُكُمُ اللّٰهُ ؕ وَاللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿٢٨٢﴾

र (याद राख) न त लेख्नेवालालाई हानि पुऱ्याइयोस् न साक्षीहरूलाई [1], र यदि तिमी यस्तो गर्दछौ भने यो तिम्रो खुल्लारूपले अवज्ञा हो । अल्लाहसित तर्स ।[2] अल्लाह (तआ़ला) तिमीलाई शिक्षा दिइराखेको छ र अल्लाह (तआ़ला) सर्वज्ञ छ ।

وَاِنْ كُنْتُمْ عَلٰى سَفَرٍ وَّلَمْ تَجِدُوْا كَاتِبًا فَرِهٰنٌ مَّقْبُوْضَةٌ ؕ فَاِنْ اَمِنَ بَعْضُكُمْ بَعْضًا فَلْيُؤَدِّ الَّذِي اؤْتُمِنَ اَمَانَتَهٗ وَلْيَتَّقِ اللّٰهَ رَبَّهٗ ؕ وَلَا تَكْتُمُوا الشَّهَادَةَ ؕ وَمَنْ يَّكْتُمْهَا فَاِنَّهٗٓ اٰثِمٌ قَلْبُهٗ ؕ

(२८३) र यदि तिमीहरू यात्रामा छौ र लेख्नेदास पाउँदैनौ भने गिरवी (धितो) आफ्नो पासमा राख्ने गर ।[3] र यदि तिमीहरूलाई एक-अर्कामा विश्वास छ भने जसलाई नासो दिइएको छ, त्यसले (नासो) फर्काओस् र अल्लाह (तआ़ला) सित तर्सिराखोस् जो उसको स्वामी हो ।[4] र प्रमाणलाई नलुकाउ र जसले त्यसलाई लुकाउँछ,

[1] यिनलाई हानि पुऱ्याउनबाट तात्पर्य यो हो कि धेरै टाढाबाट उनीहरूलाई बोलाइयोस्, जसबाट उनको ब्यस्ततामा बाधा तथा हानि पुग्ने सम्भावना होस् अथवा उनलाई झूठो कुरा लेख्न अथवा त्यसलाई साक्षी बन्नको लागि बाध्य गरियोस् ।

[2] अर्थात् जुन कुराहरूमा जोड दिइएको छ, तिनलाई गर तथा जसबाट रोकिएको छ, त्यसबाट पन्छिनु ।

[3] यदि यात्रामा ऋण लिने आवश्यकता पर्दछ र त्यहाँ लेखनदास अथवा कागज कलम उपलब्ध छैन भने यस्तो स्थितिमा त्यसको समरुप कार्य गर्न भनिंदैछ कि ऋणी व्यक्ति कुनै वस्तु ऋण दिनेवालाको पासमा धितो राखिदेओस् । यसबाट धितो राख्ने कुरोको औचित्य सिद्ध हुन्छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले आफ्नो कवच एउटा यहूदीको पासमा गिरवी (धितो) राख्नुभएको थियो । (सहीहैन) तर यदि धितो राखिएको कुरोबाट कुनै प्रकारको लाभ हुन्छ भने त्यसबाट लाभान्वित त्यसको मालिक (ऋणी) हुनेछ, न कि ऋण दिनेवाला । परन्तु यदि ऋण दिनेवालाको त्यसमा केही ब्यय हुन्छ भने त्यो ऋणीबाट प्राप्त गर्न सक्छ । शेष लाभ मालिकलाई दिनु आवश्यक हुनेछ ।

[4] यदि एक-अर्कामथि विश्वास छ भने धितो नराखीकन पनि ऋणको सौदा गर्न सक्छौ । अमानत (नासो)बाट तात्पर्य यहाँ ऋण छ । ऋणको सौदा गर्न सक्छौ । अमानतबाट तात्पर्य यहाँ ऋण छ । अल्लाहसित तर्सदैं त्यसलाई उचित रुपले चुक्ता गर ।

وَاللَّهُ بِمَا تَعْمَلُونَ عَلِيمٌ ۝

नि:सन्देह त्यो मनको पापी रहेको छ ।[1] र जे-जति तिमी गर्दछौ अल्लाह (तआ़ला) त्यसलाई राम्ररी जान्दछ ।

لِلَّهِ مَا فِي السَّمَٰوَاتِ وَمَا فِي الْأَرْضِ ۗ وَإِن تُبْدُوا مَا فِي أَنفُسِكُمْ أَوْ تُخْفُوهُ يُحَاسِبْكُم بِهِ اللَّهُ ۖ فَيَغْفِرُ لِمَن يَشَاءُ وَيُعَذِّبُ مَن يَشَاءُ ۗ وَاللَّهُ عَلَىٰ

(२८४) आकाशहरू र धर्तीका प्रत्येक वस्तु अल्लाह (तआ़ला) कै अधीनमा छ । तिम्रा हृदयहरूमा जे-जति छ, त्यसलाई चाहे प्रकट गर अथवा लुकाउ, अल्लाह (तआ़ला) त्यसको हिसाब लिनेछ ।[2] अनि जसलाई चाहन्छ, क्षमा गरिदिन्छ ।

[1]साक्ष्यलाई लुकाउनु महापाप हो । यसकारण यसको अति भर्त्सना यहाँ कुर्आनमा तथा हदीसमा गरिएको छ । यसकारण सही साक्षयको बडो श्रेष्ठता पनि छ । सहीह मुस्लिमको हदीस छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयोः

(ألا أُخبِرُكُم بِخَيرِ الشُّهداءِ؟ الَّذي يأتِي قَبلَ أنْ يُسألها)

"त्यो सबभन्दा श्रेष्ठ साक्षी हो, जो साक्ष्यको माँग बिना नै, स्वयं साक्ष्यको लागि उपस्थित हुन्छ ।" (सहीह मुस्लिम, उधृत इब्ने कसीर)

एक अर्को कथनमा नराम्रो साक्षीतिर ईङ्गित गरिएको छ ।

(ألا أُخبِرُكُم بشَرِّ الشُّهَداءِ؟ الَّذينَ يَشهَدُونَ قَبلَ أنْ يُستَشهَدُوا)

"के म तिमीलाई त्यो साक्षीबारे भनुँ, जो साह्रै नराम्रो साक्षी हो ? यी त्यसता मानिसहरू हुन्, जो साक्ष्यको माँग गरिनुभन्दा पूर्वनै साक्ष्य दिन्छन् ।" (सहीह बुखारी किताबुल रिकाक तथा मुस्लिम किताबु फजायल अल-सहाबा)

अर्थात् झूठो साक्ष्य दिएर महापाप गर्नुको भागी बन्दछन् । शेष आयतमा हृदयको विशेष रूपले वर्णन गरिएको छ, यसकारण कि गोपनीयता हृदयको नै कर्म हो । यसका अतिरिक्त हृदय सम्पूर्ण शरीरको प्रमुख एव विशेष भाग हो । र यस्तो विशेष मासुको टुक्रा हो, यदि यो ठीक रहन्छ, भने सम्पूर्ण शरीर ठीक रहन्छ र यदि यसमा कुनै खराबी उत्पन्न हुन्छ भने सम्पूर्ण शरीरमा खराबी उत्पन्न हुन्छ । (हदीसको भाँति)

[2]हदीसमा छ कि जब यो आयत अवतरित भयो त सहाबा किराम (*रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका* सहचर) चिन्तित भए । उनीहरू *रसूल सल्लल्लाहु अलैहि वसल्लमको* सेवामा उपस्थित भए र भने हे *रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम*, नमाज़, रोजा, ज़कात तथा धर्मयुद्ध जसको पनि आदेश दिइएको छ, हामी त्यसलाई गर्दछौं किनभने यो हाम्रो शक्तिभन्दा अधिक छैन, तर मनोगत विचार एवं शंङ्काहरूमा हाम्रो कुनै पकड छैन । र यो मनुष्यको शक्तिभन्दा बाहिर छ । परन्तु अल्लाह तआ़लाले त्यसमाथि पनि पकड गर्ने घोषणा गरेको छ ।

كُلِّ شَيْءٍ قَدِيْرٌ

र जसलाई चाहन्छ दण्ड दिन्छ । र अल्लाह (तआला) सर्वशक्तिमान छ ।

اٰمَنَ الرَّسُوْلُ بِمَآ اُنْزِلَ اِلَيْهِ مِنْ رَّبِّهٖ وَالْمُؤْمِنُوْنَ ۭ كُلٌّ اٰمَنَ بِاللّٰهِ وَمَلٰۗىِٕكَتِهٖ وَكُتُبِهٖ وَرُسُلِهٖ ۣ لَا نُفَرِّقُ بَيْنَ اَحَدٍ

(२८५) रसूल (मुहम्मद) त्यस कुरामा ईमान ल्याए, (निष्ठावान भए) जुन कुरा उनीतिर अल्लाह (तआला) को तर्फबाट उतारियो र मुसलमान पनि निष्ठावान भए । ती सबैले अल्लाह (तआला) प्रति र त्यसका फरिश्ताहरूप्रति र त्यसका किताबहरूप्रति र त्यसका

नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : "अहिले त तिमी سمعنا وأطعنا (हामीले सुन्यौं र हामीले पालन गर्‍यौं नै भन ।" अत: सहाबाको यस सुन्ने तथा पालन गर्ने भावनालाई देखेर अल्लाह तआलाले यो आयत ﴿لَا يُكَلِّفُ اللّٰهُ نَفْسًا اِلَّا وُسْعَهَا﴾ (अल्लाह तआला कुनै जीवमाथि त्यसको सामर्थ्यभन्दा धेरै भार राख्दैन) बाट निरस्त गरिदियो (इब्ने कसीर व फतहुल क़दीर) सहीहैन तथा सुननको यो हदीस पनि यसको पुष्टि गर्दछ ।

(إِنَّ اللّٰهَ تجاوز عن أُمَّتي ما حدَّثتْ بِهِ أَنْفُسَها، ما لَمْ تكلَّمْ أَوْ تَعْمَلْ بِهِ)

(अल्लाह तआलाले मेरो उम्मत (अनुयायीहरू) लाई भन्दछन्) कि मनोगत विचारहरुलाई क्षमा गरिदिएको छ, परन्तु ती कुराहरुमा पकड हुनेछ, जसलाई मुखले व्यक्त गरिएको छ अथवा तिनका अनुसार कर्म गरियोस्)

यसबाट ज्ञात भयो कि हृदयमा उत्पन्न हुने कुविचारहरूमाथि तबसम्म पकड हुने छैन, जबसम्म त्यो संकल्प कर्म नबनोस् । यसको विपरीत ईमाम इब्ने जरीर तबरीको विचार छ कि आयत निरस्त छैन, किनभने पकड गर्नमा दण्ड दिनु आवश्यक छैन, अर्थात् यस्तो छैन कि अल्लाह तआला जुन कुरोमा पकड गर्दछ, त त्यसमा दण्ड पनि अवश्य देओस् । बरु अल्लाह तआलाले पकड त हरेक कुरोमा गर्नेछ, परन्तु धेरैजसो यस्ता मानिसहरू हुनेछन् कि उनको पकड गरे पश्चात उनीहरूलाई क्षमा गरिदिनेछ, बरु केहीका साथ यस्तो पनि गर्नेछ कि तिनका एक-एक पाप याद गराएर उनीहरूलाई त्यसबाट स्वीकार गराउनेछ र पछि भन्नेछ कि संसारमा मैले उनीमाथि पर्दा राखिदिएको थिए जुन आज मैले तिनीहरूलाई क्षमा गरे । (यो हदीस सहीह बुखारी र मुस्लिम आदिमा छ, उधृत इब्ने कसीर) र केही विद्वानहरूले भने कि यो पारिभाषिक अर्थमा निरस्त छैन, बरु कैयौं पटक यसलाई प्रकाशित गर्नुको अर्थमा प्रयोग गरिन्छ । अत: सहाबा किरामको हृदयमा जुन शंका यस आयतका कारण उत्पन्न भयो त्यसलाई ﴿لَا يُكَلِّفُ اللّٰهُ﴾ र (हदीस إِنَّ الله تجاوز आदिबाट हटाईदियो) यसप्रकार आयतलाई निरस्त मान्नुको आवश्यकता शेष रहेन

رَسُلِهٖ وَقَالُوْا سَمِعْنَا وَاَطَعْنَا غُفْرَانَكَ رَبَّنَا وَاِلَيْكَ الْمَصِيْرُ

रसूलहरूप्रति निष्ठावान भए, त्यसका रसूलहरू मध्ये कसैमा हामी मतभेद गर्दैनौं ।[1] उनीहरूले (यो पनि) भने कि हामीले सुन्यौं र अनुकरण गर्‍यौं । हामी तिमीसित क्षमा चाहन्छौं, हे हाम्रो प्रभु ! र हामी तिमीतिर नै फर्कनु छ ।

لَا يُكَلِّفُ اللّٰهُ نَفْسًا اِلَّا وُسْعَهَا لَهَا مَا كَسَبَتْ وَعَلَيْهَا مَا اكْتَسَبَتْ رَبَّنَا لَا تُؤَاخِذْنَا اِنْ نَّسِيْنَا اَوْ اَخْطَاْنَا رَبَّنَا وَلَا تَحْمِلْ عَلَيْنَا اِصْرًا كَمَا حَمَلْتَهٗ عَلَى الَّذِيْنَ مِنْ قَبْلِنَا رَبَّنَا وَلَا تُحَمِّلْنَا مَا لَا طَاقَةَ لَنَا بِهٖ وَاعْفُ عَنَّا وَاغْفِرْ لَنَا

(२८६) अल्लाह कुनै पनि व्यक्तिमाथि त्यसको सामर्थ्यभन्दा बढी बोझ हाल्दैन, जुन पुण्य त्यो गर्दछ, त्यो त्यसको लागि छ र जुन दुष्कर्म त्यो गर्दछ, त्यो उसैमाथि छ । हे हाम्रा प्रभु ! यदि हामीले बिर्सेका छौं अथवा गल्ती गरेका छौं भने हामीलाई नसमात्नु । हे हाम्रा प्रभु ! हामीमथि त्यस्तो बोझ नहाल्नु, जस्तो पहिलेका मानिसहरूमाथि हालेका थियौ । हे हाम्रो प्रभु ! हामी माथि त्यस्तो बोझ नहाल्नु जुन हाम्रो सामर्थ्यमा छैन र हामीलाई क्षमा गर,

[1]यस आयतमा ईमानसँग सम्बन्धित विषयहरूको वर्णन छ, जसमा ईमान भएकाहरूलाई आस्था राख्न आदेश दिइएको छ । र यसभन्दा पूर्व आयत لا يكلف الله मा अल्लाह तआलाको कृपा, दया, स्नेह र प्रेमको वर्णन छ कि अल्लाह तआलाले मनुष्यलाई कुनै यस्तो कर्म गर्नमा जोड दिएन जुन उसको शक्तिभन्दा माथि छ । यी दुबै आयतहरूको हदीसहरूमा बडो प्रशंसा गरिएको छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएको छ :

> "जुन व्यक्ति सूरः अल-बक़राका अन्तिम दुई आयतहरू रातिमा पढ्छ, त्यो त्यसका लागि पर्याप्त हुन्छ ।" *(सहीह बुख़ारी, इब्ने कसीर)*

अर्थात् यस कर्मको कारण अल्लाह तआला त्यसको सुरक्षा गर्दछ । अर्को हदीसमा छ : नबी सल्लल्लाहु अलैहि वसल्लमलाई मिराजको राति जुन तीनवटा कुराहरू प्राप्त भए, तिनीहरुमध्ये एउटा सूर: बक़राका अन्तिम दुई आयतहरू पनि हुन्) (सहीह मुस्लिम, बाब फी ज़िक्रे सिदर: तुल मुन्तहा) अन्य कथनहरूमा यस्तो पनि भनिएको छ कि अन्तिम आयतहरू उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई एउटा कोषबाट प्रदान गरियो जुन अर्श इलाही मुनि छ । र यी आयतहरू उहाँको अतिरिक्त कुनै अन्य नबीलाई प्रदान गरिएनन् (अहमद निसाई, तबरानी, बैहकी, हाकिम दारमी आदि दुर्रे मन्सूर) आदरणीय मआज रजीअल्लाह तआला अन्हु यस सूर:को अन्तमा आमीन भन्ने गर्नुहुन्थ्यो । (इब्ने कसीर) तर कुनै पनि सही हदीसमा आमीन भन्नु प्रमाणित छैन ।

وَارْحَمْنَا ۚ أَنْتَ مَوْلٰنَا فَانْصُرْنَا عَلَى الْقَوْمِ الْكٰفِرِيْنَ ﴿٢٨٦﴾

र हामीलाई मुक्ति प्रदान गर र हामीमाथि दया गर, तिमी नै हाम्रो स्वामी हौ, अतः नकार्ने समुदाय विरुद्ध हाम्रो मद्दत गर ।

## سُوْرَةُ اٰلِ عِمْرٰنَ

## सूरतु आले-इमरान–३

सूरः आले इमरान मदीनामा अवतरित भयो[1] यसमा दुई सय आयत र बीस रुकुअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाह बडो दयावान अति करूणामयीको नामबाट प्रारम्भ गर्दछु ।

الٓمّٓ ﴿١﴾

(१)अलिफ. लाम. मीम. ।

اللّٰهُ لَآ اِلٰهَ اِلَّا هُوَ الْحَيُّ الْقَيُّوْمُ ﴿٢﴾

(२) अल्लाह (तआ़ला) त्यो हो, जस बाहेक कोही पूज्य छैन, जो जीवित छ र सबैको रक्षक छ ।[2]

[1]यो सूरः मदनी हो । यसका सबै आयतहरू विभिन्न समयमा मदीनामा नै अवतरित भए र यसको प्रारम्भिक भाग अर्थात ८३ आयतहरूसम्म इसाईहरुका नजरान्का प्रतिनिधि मण्डल (यो नगर अब साउदी अरबमा स्थित छ) को विषयमा उत्रेको हो, जो नौ हिज्रीमा नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भएको थियो । इसाईहरुले आई नबी करीम सल्लल्लाहु अलैहि वसल्लमसित आफ्नो इसाई विश्वास र इस्लामको विषयमा वाद-प्रतिबाद गरे, जसको खण्डन गर्दै उनीहरूलाई मुबाहिला (एउटा बिधि हो, जसअनुसार सौगन्ध (कसम) खाएर आफ्नो कुरा भनिन्छ) को आमन्त्रण पनि दिइयो, जसको विस्तारपूर्वक विवरण अगाडि दिइनेछ । त्यसै पृष्ठभूमिमा कुर्आन करीमका यी आयतहरूको अध्ययन गरिनेछ ।

[2]حی र قیوم अल्लाह तआलाका अति विशेष गुण हुन्, हईको अर्थ हो कि त्यो आदिदेखि छ र अन्तसम्म रहने छ, त्यसलाई मरण तथा विनाश छैन । कय्यूमको अर्थ हो त्यो सम्पूर्ण सृष्टिको आधार, रक्षक एवं संरक्षक हो, सम्पूर्ण सृष्टिलाई उसको आवश्यकता छ, उसलाई कसैको आवश्यकता छैन । इसाई आदरणीय ईसालाई अल्लाह अथवा अल्लाहका पुत्र अथवा तीनमध्येबाट एक मान्दथे अर्थात् उनलाई भनिदैछ कि जब आदरणीय ईसा पनि अल्लाहका सृष्टि हुन्, उनले आमाको गर्भबाट जन्म लिए र उनको जन्म पनि सृष्टिको उत्पत्ति भन्दा धेरै पछिको हो, तसर्थ उनी अल्लाह तथा अल्लाहका पुत्र कसरी हुन सक्छन् ? यदि तिम्रो विश्वास

نَزَّلَ عَلَيْكَ الْكِتٰبَ بِالْحَقِّ مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ وَاَنْزَلَ التَّوْرٰىةَ وَالْاِنْجِيْلَ ③

(३) जसले सत्यका साथ यस किताब (पवित्र कुरआन) लाई अवतरित गऱ्यो,[1] जुनकि आफुभन्दा पूर्वका (धर्मशास्त्रहरू) लाई प्रमाणित गर्दछ, र उसैले यसभन्दा पूर्व (धर्मग्रन्थ) तौरात र इंजीललाई मानिसहरूका मार्गदर्शनको लागि उताऱ्यो ।[2]

مِنْ قَبْلُ هُدًى لِّلنَّاسِ وَاَنْزَلَ الْفُرْقَانَ ۬ اِنَّ الَّذِيْنَ كَفَرُوْا بِاٰيٰتِ اللّٰهِ لَهُمْ عَذَابٌ شَدِيْدٌ ؕ وَاللّٰهُ عَزِيْزٌ ذُو انْتِقَامٍ ④

(४) र कुरआन पनि उसैले उताऱ्यो ।[3] जुन मानिसहरू अल्लाह (तआला) का आयतहरुसित कुफ्र (नकार्नु) गर्दछन्, उनीहरूका लागि कठोर यातनाहरु छन् । र अल्लाह (तआला) प्रभावशाली, प्रत्युपकारी (दुष्कर्मको बदला लिनेवाला) पनि छ ।

اِنَّ اللّٰهَ لَا يَخْفٰى عَلَيْهِ شَيْءٌ فِي الْاَرْضِ وَلَا فِي السَّمَآءِ ⑤

(५) निःसन्देह अल्लाह (तआला) बाट धर्ती र आकाशको कुनै कुरा लुकेको छैन ।

साँचो भएको भए उनीहरू सृष्टिको साटो अल्लाहका विशेषताहरूले युक्त एवं आदिबाट हुनुपर्थ्यो । यसका अतिरिक्त उनको मृत्यु पनि नहुनुपर्थ्यो, परन्तु एक दिन आउने छ कि उनलाई पनि मृत्युको स्वाद चाख्नुपर्नेछ । र इसाईहरूको कथनानुसार उनी मृत्युलाई प्राप्त गरिसके । हदीसहरूमा चर्चा छ कि तीन आयतहरूमा अल्लाहका श्रेष्ठ नाम छन्, जसद्वारा प्रार्थना गरिन्छ भने रद्द हुँदैन । यउटा यही आले-इमरानको आयत, दोस्रो आयतल कुर्सीमा ﴿اللّٰهُ لَا اِلٰهَ اِلَّا هُوَ الْحَيُّ الْقَيُّوْمُ﴾ तेस्रो सूरः ताहामा ﴿وَعَنَتِ الْوُجُوْهُ لِلْحَيِّ الْقَيُّوْمِ﴾ (इब्ने कसीर तफ़सीर आयतल कुर्सी)

[1]अर्थात् यो अल्लाहको तर्फबाट अवतरित हुनुमा कुनै संशय छैन ।

[2]यसभन्दा पहिला अन्य नबीहरूमाथि जुन किताबहरू अवतरित भए, यो किताब त्यसको पुष्टि गर्दछ । अर्थात् जुनकुरा त्यसमा लेखिएका थिए, उनको यथार्थता र तिनमा वर्णित भविष्यवाणीलाई स्वीकार गर्दछ । जसको स्पष्ट अर्थ छ कि यो कुरआन करीम पनि उसैको तर्फबाट उतारिएको हो, जसले यसभन्दा पूर्व अनेक धर्मशास्त्र उतारेको छ । यदि यो कुनै अन्यको तर्फबाट अथवा मानवीय प्रयासहरूको प्रतिफल भए, यिनीहरूमा परस्पर अनुकूलताको साटो प्रतिकूलता हुने थियो ।

[3]अर्थात् आ-आफ्ना समयमा तौरात र इंजील पनि अवश्य मानिसहरूको मार्ग-दर्शनको स्रोत थियो, यसकारण कि यिनलाई उतार्नुको उद्देश्य नै यही थियो । तैपनि त्यस पश्चात ﴿وَاَنْزَلَ الْفُرْقَانَ﴾ पुनः भनेर स्पष्ट गरिदियो कि, तौरात र इंजीलको युग समाप्त भयो । अब कुरआन उतारिसक्यो, त्यो फुरकान हो र अब केवल त्यही सत्य-असत्यको पहिचान हो, यसलाई सत्य नमानी अल्लाहको निकट कोही आज्ञाकारी एवं निष्ठावादी छैन ।

هُوَ الَّذِي يُصَوِّرُكُمْ فِي الْأَرْحَامِ كَيْفَ يَشَاءُ ۚ لَا إِلَٰهَ إِلَّا هُوَ الْعَزِيزُ الْحَكِيمُ ⑥

(६) त्यसैले आमाको गर्भमा तिम्रो रूप जुनप्रकारको चाहन्छ, बनाउँछ [१] त्यसबाहेक कोही पनि वास्तविक रूपले पूजायोग्य छैन, त्यो सर्वशक्तिशाली र सर्वज्ञाता छ ।

هُوَ الَّذِي أَنزَلَ عَلَيْكَ الْكِتَابَ مِنْهُ آيَاتٌ مُّحْكَمَاتٌ هُنَّ أُمُّ الْكِتَابِ وَأُخَرُ مُتَشَابِهَاتٌ ۖ

(७) त्यही अल्लाह (तआ़ला) हो, जसले तिमीलाई किताब उतार्‍यो, जसमा स्पष्ट ठोस आयतहरू छन्, जुन मूल किताब हो, केही समान आयतहरू छन् [२] तसर्थ जसका हृदयमा खराबी छ, तिनीहरू

[१]सुरूप अथवा कुरूप, नर अथवा नारी, सौभाग्य अथवा दुर्भाग्य, अपूर्ण अथवा पूर्ण । जब माताको गर्भमा यी सारा अवस्थाहरू दिने मात्र अल्लाह तआ़ला नै हो, भने आदरणीय ईसा पूज्य कसरी हुन सक्छन् ? जबकि उनी स्वयं पनि सृष्टिका यी अवस्थाहरूबाट गुज्रेर संसारमा आउनु भएको छ, जसको उद्‌गम अल्लाहले आमाको गर्भमा स्थापित गरेको छ ।

[२]'मुहकमात' सित तात्पर्य ती आयतहरू हुन् जसमा आदेश, निषेध, समस्याहरु एवं कथाहरु छन्, जसको भावार्थ स्पष्ट एवं अटल छ, ती कुरा बुझ्न कुनै प्रकारको कठिनाई हुँदैन । यसको विपरीत 'आयात मुताशाबिहात' छ । जस्तो अल्लाहको अस्तित्व, न्याय तथा भाग्यका समस्याहरू, स्वर्ग, नरक तथा मलायका (सूरहरू) स्वर्गदूतहरू आदि अर्थात् परबोधका तथ्य छन् जसका यथार्थता एवं वास्तविकतालाई बुझ्न मानौं असक्त छ अथवा उनीमा दुबिधा अथवा द्वैतको अवकाश होस् । अथवा कमसेकम यस्तो अस्पष्टता हुन्छ, जसबाट मनुष्यहरूलाई भ्रमित गर्न सकियोस् । यसैकारण अगाडि भनिदैछ कि जसका हृदयमा खराबी हुन्छ उनी 'आयात मुताशाबिहात' को पछि लाग्छन् र उनीद्वारा अशान्ति फैलाउँछन् । जस्तो इसाई छन् । कुरआ़नले आदरणीय ईसालाई अल्लाहको भक्त तथा नबी भनेको छ । यो एउटा स्पष्ट एवं दृढ (मोहकम) आयत हो । तर यसलाई छाडेर कुरआ़न करीममा आदरणीय ईसालाई 'रूहुल्लाह' र 'कलिमतुल्लाह' जुन भनिएको छ, त्यसबाट आफ्ना भ्रामक विश्वासको आधारमा गलत अर्थ निकाल्दछन् । यही स्थिति अहले बिदअतको छ । कुरआ़न करीमको स्पष्ट विश्वासको विपरीत बिदअत गर्नेहरूले जुन भ्रमिक विश्वास मनगढन्तरुपले रचेका छन् । यी तिनै 'मुताशाबिहात' लाई आधार बनाउँछन् । तथा प्राय आफ्ना तर्कहरूद्वारा 'मुहकमात' लाई 'मुताशाबिहात' बनाईदिन्छन् أعاذنا الله منه यसका विपरीत दृढ विश्वासी मुसलमान 'मुहकमात'का आयत अनुसार कर्म गर्दछन् र 'मुताशाबिहात' अर्थलाई पनि (यदि यसमा अस्पष्टता छ) 'मुहक्‌मात'को प्रकाशमा बुझ्ने प्रयत्न गर्दछन् किनभने कुरआ़नले यिनैलाई 'मूल किताब' मानेको छ । जसकारण उनी अशान्तिबाट पनि सुरक्षित रहन्छन् । र विश्वासबाट विचलित हुनबाट पनि सुरक्षित रहन्छन् ।

فَأَمَّا الَّذِينَ فِي قُلُوبِهِمْ زَيْغٌ فَيَتَّبِعُونَ مَا تَشَابَهَ مِنْهُ ابْتِغَاءَ الْفِتْنَةِ وَابْتِغَاءَ تَأْوِيلِهِ ۗ وَمَا يَعْلَمُ تَأْوِيلَهُ إِلَّا اللَّهُ ۗ وَالرَّاسِخُونَ فِي الْعِلْمِ يَقُولُونَ آمَنَّا بِهِ كُلٌّ مِنْ عِندِ رَبِّنَا ۗ وَمَا يَذَّكَّرُ إِلَّا أُولُو الْأَلْبَابِ ﴿٧﴾

त समान आयतहरूका अनुसरण, अशान्ति उत्पन्न गर्नको लागि एवं उनको कष्ट कल्पनाको निम्ति गर्दछन्, तर उनीहरूको वास्तविक उद्देश्यलाई अल्लाह (तआला) बाहेक कोही जान्दैन ।[1] र पूर्ण एवं दृढ ज्ञान भएका यही भन्दछन् कि हामी त तिनीहरूमा ईमान स्थापित गरिसक्यौं, यो सबै हाम्रो प्रभुको तर्फबाट हो, शिक्षा त मात्र बुद्धिमान नैं प्राप्त गर्दछन् ।

رَبَّنَا لَا تُزِغْ قُلُوبَنَا بَعْدَ إِذْ هَدَيْتَنَا وَهَبْ لَنَا مِن لَّدُنكَ رَحْمَةً ۚ إِنَّكَ أَنتَ الْوَهَّابُ ﴿٨﴾

(८) हे हाम्रो प्रभु ! हामीलाई सोझो मार्गदर्शन गरे पश्चात हाम्रा हृदयलाई बाङ्गो नगर र हामीलाई आफ्नो पासबाट कृपा प्रदान गर, निःसन्देह तिमी नै परमदाता हौ ।

رَبَّنَا إِنَّكَ جَامِعُ النَّاسِ لِيَوْمٍ لَّا رَيْبَ فِيهِ ۚ إِنَّ اللَّهَ لَا يُخْلِفُ الْمِيعَادَ ﴿٩﴾

(९) हे हाम्रो प्रभु ! तिमी निःसन्देह मानिसहरूलाई एक दिन एकत्रित गर्ने छौं, जुन दिन आउने कुरोमा कुनै शंका छैन । निःसन्देह अल्लाह (तआला) वचन विपरीत गर्दैन ।

إِنَّ الَّذِينَ كَفَرُوا لَن تُغْنِيَ عَنْهُمْ أَمْوَالُهُمْ وَلَا أَوْلَادُهُم مِّنَ اللَّهِ شَيْئًا ۖ وَأُولَٰئِكَ هُمْ وَقُودُ النَّارِ ﴿١٠﴾

(१०) काफ़िरहरूलाई (अस्वीकार गर्ने) उनका धन तथा उनका सन्तान अल्लाह (तआला) का यातनाहरूबाट मुक्त गराउन कुनै काम आउने छैनन्, यिनी त नरकका ईन्धन नै हुन् ।

---

[1]तावीलको एउटा अर्थ हो: कुनै वस्तुको तत्वको ज्ञान । यस अर्थ अनुसार إلا الله मा रुक्नु आवश्यक छ, किनभने प्रत्येक विषयको यथार्थताको वास्तविक ज्ञान मात्र अल्लाहलाई नै छ, दोस्रो अर्थ कुनै विषयको व्याख्या, भाष्य, वर्णन तथा स्पष्टीकरण हो, यस अर्थअनुसार والراسخون मा रुक्न सकिन्छ, किनभने ज्ञानी मानिसहरू पनि सहीह व्याख्या एवं भाष्यको ज्ञान राख्दछन् । (इब्ने कसीर)

كَدَأْبِ اٰلِ فِرْعَوْنَ ۙ وَالَّذِيْنَ مِنْ قَبْلِهِمْ ۚ كَذَّبُوْا بِاٰيٰتِنَا ۚ فَاَخَذَهُمُ اللّٰهُ بِذُنُوْبِهِمْ ۚ وَاللّٰهُ شَدِيْدُ الْعِقَابِ ﴿١١﴾

(११) जस्तो कि फिर्‌औनको सन्तानको अवस्था भयो, र तिनीहरुको जो उनीहरुभन्दा पुर्व थिए, तिनीहरुले हाम्रा निशानीहरुलाई झुठ्लाए, अनि अल्लाह (तआला) ले उनीहरुलाई उनीहरुको पापको कारण समात्यो र अल्लाह (तआला) कठोर यातनाहरु दिनेछ ।

قُلْ لِّلَّذِيْنَ كَفَرُوْا سَتُغْلَبُوْنَ وَتُحْشَرُوْنَ اِلٰى جَهَنَّمَ ۚ وَبِئْسَ الْمِهَادُ ﴿١٢﴾

(१२) काफिरहरुसित भनिदिनुस् कि तिमीहरु निकट भविष्यमै पराजित हुनेछौ ।[1] र नरकतिर एकत्रित गरिनेछौ र त्यो नराम्रो ओछ्यान हो ।

قَدْ كَانَ لَكُمْ اٰيَةٌ فِيْ فِئَتَيْنِ الْتَقَتَا ۚ فِئَةٌ تُقَاتِلُ فِيْ سَبِيْلِ اللّٰهِ وَاُخْرٰى كَافِرَةٌ يَّرَوْنَهُمْ مِّثْلَيْهِمْ رَاْيَ الْعَيْنِ ۚ

(१३) निःसन्देह तिम्रो लागि शिक्षाप्रद निशानी (लक्षण) थियो, जुन ती दुई गुटबीच (बद्रको लडाईमा भिडन्त भएको थियो, एउटा गुट अल्लाहको मार्गमा युद्ध गरिराखेको थियो, र दोस्रो समूह (दल) काफिरहरुको थियो, तिनीहरुले, उनीहरुलाई आफ्नो दृष्टिले आफूभन्दा दुईगुना देख्दथे ।[2]

[1]यहाँ काफ़िरहरु (कृतघ्न) सित तात्पर्य यहूदीहरु हुन्, र यो भविष्यवाणी शीघ्र नै पूरा भयो । अतः बनू क़ैनुक़ाअ र बनू नज़ीरलाई देशबाट निष्कासित गरियो, बनू कुरैज़ाको हत्या गरियो । अनि ख़ैबर विजयी भयो र सबै यहूदीमाथि जिज़या (सुरक्षाकर) लागू गरियो । (फ़तहुल क़दीर)

[2]अर्थात् प्रत्येक पक्ष अर्को पक्षलाई आफूभन्दा दुईगुना देख्यो । काफिरहरुको संख्या एक हजारको निकट थियो, उनीहरुलाई लगभग दुई हजार मुसलमान देखिन्थे । उद्देश्य, उनीहरुका हृदयमा मुसलमानहरुको धाक बसाल्नु थियो र मुसलमानहरुको संख्या तीन सयभन्दा केही माथि अर्थात् (३१३) थियो, उनीहरुलाई काफिर ६०० देखि ७०० मध्ये देखापर्थ्यो । वास्तविकता यो थियो कि वास्तविक संख्या हजारको निकट (तीन गुना) थियो। यसको उद्देश्य मुसलमानहरुका साहस एवं शौर्यलाई बढाउनु थियो । आफूभन्दा तीन गुना देखेर सम्भव थियो कि मुसलमान भयभीत हुन्थे, यसको सट्टा आफूभन्दा दुई गुना देखिनाका कारण उनीहरुको साहस कम भएन । परन्तु यो दुई गुना देखिनुको स्थिति प्रारम्भमा थियो, अनि जब दुबै गुट एक-अर्का सामु उभे त अल्लाह (तआला) ले यसको विपरीत दुबैलाई एक-अर्काको दृष्टिमा कम गरेर देखायो ताकि कुनै पनि पक्ष लडाईबाट पछि नहटोस् बरु प्रत्येकले अगाडी बढ्न प्रयत्न गरोस् । (इब्ने क़सीर) यो विवरण सूरः अल-अंफ़ालको आयत संख्या ४४ मा वर्णित गरिएको छ । यो बद्रको युद्धको घटना हो, जुन हिज़रात पश्चात दोस्रो वर्ष मुसलमानहर र काफ़िरहरु बीच युद्ध

وَاللهُ يُؤَيِّدُ بِنَصْرِهِ مَنْ يَّشَاءُ ۗ اِنَّ فِيْ ذٰلِكَ لَعِبْرَةً لِّاُولِي الْاَبْصَارِ ⑬

र अल्लाह (तआला) जसलाई चाहन्छ आफ्नो सहायताले सुदृढ गर्दछ । निःसन्देह यसमा आखा भएका लागि ठूलो शिक्षा छ ।

زُيِّنَ لِلنَّاسِ حُبُّ الشَّهَوٰتِ مِنَ النِّسَآءِ وَالْبَنِيْنَ وَالْقَنَاطِيْرِ الْمُقَنْطَرَةِ مِنَ الذَّهَبِ وَالْفِضَّةِ وَالْخَيْلِ الْمُسَوَّمَةِ وَالْاَنْعَامِ وَالْحَرْثِ ۗ ذٰلِكَ مَتَاعُ الْحَيٰوةِ

(१४) प्रिय वस्तुहरूको प्रेम मानिसहरूका लागि सौन्दर्यपूर्ण गरिएको छ, जस्तो स्त्रीहरू र पुत्र, र सुन, चाँदीका एकत्रित गरिएका ख़जाना (कोष) र निशानदार घोडा र चौपायाहरू र खेती ।[१] यो सांसारिक जीवनको सामग्री

भयो । यो कैयौं प्रकारले अत्यन्त महत्वपूर्ण युद्ध थियो । प्रथम त यो कि यो प्रथम युद्ध थियो । दोस्रो यो युद्ध बिना योजना भयो । मुसलमान अबू सुफ़ियानका काफ़िलाका लागि निस्केका थिए, जुन सीरियाबाट व्यापारिक सामाग्री लिएर मक्का आइराखेको थियो, तर सूचना पाउनाले उनीहरू आफ्ना काफ़िलालाई त बचाएर लगे, परन्तु मक्काका काफ़िर आफ्नो शक्ति र संख्याको घमण्डमा मुसलमानमाथि जाइलागे र बद्र नामक स्थानमा यो युद्ध भयो । तृतीय यसमा मुसलमानहरूलाई अल्लाह तआलाको विशेष सहायता प्राप्त भयो । चतुर्थ यसमा काफ़िरहरूलाई अपमानजनक पराजय भयो, जसबाट काफ़िरहरूको साहस क्षीण भएर गयो ।

[१]شهوات सित यहाँ तात्पर्य مشتبهات छ अर्थात् ती कुराहरू जुन मनुष्यलाई प्राकृतिक रूपले प्रिय छन् । यसकारण उनीसित अभिलाषा र उनीसित प्रेम अनुचित छैन । तर यो प्रेम इस्लामी धार्मिक नियमहरूको परिधिमा तथा सन्तुलित हुनुपर्छ । उनीहरूको सौन्दर्य पनि अल्लाह तआलाको तर्फबाट परीक्षा हो ।

﴿ إِنَّا جَعَلْنَا مَا عَلَى الْأَرْضِ زِينَةً لَّهَا لِنَبْلُوَهُمْ ﴾

"हामीले धर्तीमा जे-जति बनाएका छौं, यसलाई धर्तीको सुन्दरताको लागि बनाएका छौं, ताकि मानिसहरूको हामीले परीक्षा लिऊं ।" (अल-कहफ़-७)

सर्वप्रथम स्त्रीको वर्णन छ किनभने प्रत्येक वयस्क पुरुषको सबभन्दा ठूलो आवश्यकता पनि हो र सबभन्दा अधिक प्रिय पनि । स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लमको कथन छ (حُبِّبَ إِلَيَّ النِّسَاءُ وَالطِّيبُ) (मुसनद अहमद) "स्त्री र सुगन्ध मलाई प्रिय छ ।" यसैप्रकार नबी सल्लल्लाहु अलैहि वसल्लमले सुशील स्त्रीलाई "संसारको सर्वश्रेष्ठ कुरो" भन्नुभएको छ (خَيْرُ الْمَتَاعِ الدُّنْيَا الْمَرْأَةُ الصَّالِحَةُ) यसकारण योसित धार्मिक नियमहरूको अर्न्तगत प्रेम गर्न, जुन धार्मिक नियमहरूको बाहिर नहोस्, त यो श्रेष्ठ जीवनसाथी पनि हो र आख़िरतको सामान पनि

الدُّنْيَاءِ وَاللّٰهُ عِنْدَهٗ حُسْنُ الْمَاٰبِ ⑭

हो, र फर्कनुको राम्रो ठाउँ त अल्लाह (तआ़ला) कै निकट छ ।

قُلْ اَؤُنَبِّئُكُمْ بِخَيْرٍ مِّنْ ذٰلِكُمْ لِلَّذِيْنَ اتَّقَوْا عِنْدَ رَبِّهِمْ جَنّٰتٌ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ

(१५) तपाईं भन्नुस् कि के म तिमीलाई यसभन्दा उत्तम कुरा भनुँ ? संयमी मानिसहरूका लागि उनीहरूको प्रभुको पासमा स्वर्ग छन्, जसमा

नत्र, यही स्त्री, पुरुषको लागि सबभन्दा ठूलो अशान्ति हो । रसूल अल्लाह सल्लल्लाहु अलैहि वसल्लमको कथन छ :

(مَا تَرَكْتُ بَعْدِي فِتْنَةً أَضَرَّ عَلَى الرِّجَالِ مِنَ النِّسَاءِ)

"म पश्चात जुन अशान्ति उत्पन्न हुनेछ, तिनीहरूमा पुरुषहरूका लागि सबभन्दा ठूलो अशान्ति स्त्री छ ।" (सहीह बुखारी)

यसैप्रकार पुत्रहरूको प्रेम छ । यदि यसबाट तात्पर्य मुससलमानहरूको शान्ति बढाउन र अस्तित्व तथा वंशको बृद्धि हो, त प्रशंसनीय छ, अन्यथा अप्रशंसनीय । नबी सल्लल्लाहु अलैहि वसल्लमको पवित्र कथन छ ।

«تَزَوَّجُوا الْوَدُودَ الْوَلُودَ؛ فَإِنِّي مُكَاثِرٌ بِكُمُ الْأُمَمَ يَوْمَ الْقِيَامَةِ»

(अत्याधिक प्रेम गर्ने र अधिक बच्चाहरू जन्मदिने स्त्रीहरूसित विवाह गर, यसकारण कि म केयामतको दिन अरु उम्मतहरू (समुदाय) को सापेक्ष आफ्नो उम्मतको संख्यामा गर्व गर्नेछु)

यस आयतबाट ब्रम्हचारी रहने कुराको खण्डन र परिवार नियोजन अनुचित हुनु सिद्ध हुन्छ, किनभने بَنِين बहुवचन हो । धनबाट पनि आर्थिक व्यवस्था स्थापित गर्नु, दया गर्नु, दान र पुण्य र पुण्यका कार्यहरूमा व्यय गर्नु र कसैको अगाडि हात फैलाउनबाट बच्नु हो ताकि अल्लाहको प्रसन्नता प्राप्त गर्न सकुन्, तसर्थ यसको पनि प्रेम परम आवश्यक छ, तथापि अप्रशंसनीय । घोडाहरूसित तात्पर्य धर्मयुद्धको तयारी, अन्य पशुहरूबाट कृषि कार्य तथा यातयातको काम लिनु र धर्तीबाट त्यसको उपज प्राप्त गर्नु हो, त यो सब प्रिय छन्, र यदि उद्देश्य मात्र संसार कमाउनु र त्यसमा गर्व र घमण्ड व्यक्त गर्नु र अल्लाहको स्मरणबाट विमुख भई ऐश्वर्य जीवन व्यतीत गर्नु हो भने, सबभन्दा लाभकारी कुराहरू त्यसको निम्ति हानिकारक सिद्ध हुनेछन् । "क़नातीर" क़िन्तार (ख़जाना) को बहुवचन हो । तात्पर्य छ ख़जाना अर्थात् सुन, चाँदी, धन-धान्यको अधिकता एवं परिपूर्णता । المسومة ती घोडाहरू जुन गौचरमा चर्न छाडिएका हुन्छन् अथवा धर्मयुद्धका लागि तयार गरिएका हुन् अथवा चिन्ह लगाइएका जसमाथि विभेदको लागि कुनै चिन्ह अथवा अंक लगाइएको होस् । (फ़तहुल क़दीर एवं इब्ने क़सीर)

خٰلِدِيْنَ فِيْهَا وَاَزْوَاجٌ مُّطَهَّرَةٌ وَّرِضْوَانٌ مِّنَ اللّٰهِ ؕ وَاللّٰهُ بَصِيْرٌۢ بِالْعِبَادِ ﴿١٥﴾

नहरहरू बगिराखेका छन्, जसमा उनीहरु सधैं निवास गर्नेछन्।[1] र पवित्र पत्नीहरू[2] र अल्लाह (तआला) को प्रसन्नता छ र सबै भक्तहरू अल्लाह (तआला) को दृष्टिमा छन्।

اَلَّذِيْنَ يَقُوْلُوْنَ رَبَّنَآ اِنَّنَآ اٰمَنَّا فَاغْفِرْ لَنَا ذُنُوْبَنَا وَقِنَا عَذَابَ النَّارِ ﴿١٦﴾

(१६) जो भन्दछन् कि हे प्रभु ! हामी निष्ठावान भयौं अतः हाम्रो पाप क्षमा गरिदेउ र हामीलाई अग्निको यातनाबाट बचाउ ।

اَلصّٰبِرِيْنَ وَالصّٰدِقِيْنَ وَالْقٰنِتِيْنَ وَالْمُنْفِقِيْنَ وَالْمُسْتَغْفِرِيْنَ بِالْاَسْحَارِ ﴿١٧﴾

(१७) जो धैर्यवान, र सत्यवादी र आज्ञाकारी, तथा अल्लाहको मार्गमा धन व्यय गर्ने छन् र मिरमिरे बिहानीमा मोक्ष प्राप्त गर्नुको कामनाको लागि प्रार्थना गर्दछन्।

شَهِدَ اللّٰهُ اَنَّهٗ لَآ اِلٰهَ اِلَّا هُوَ ۙ وَالْمَلٰٓئِكَةُ وَاُولُوا الْعِلْمِ قَآئِمًاۢ بِالْقِسْطِ ؕ لَآ اِلٰهَ اِلَّا هُوَ

(१८) अल्लाह, त्यसका फरिश्ता (स्वर्गदूत) तथा ज्ञानीहरूले न्यायमा स्थिर रही साक्ष्य दिएका छन् कि अल्लाहको अतिरिक्त कोही आराध्य छैन[3]

[1]यस आयतमा निष्ठावानहरूलाई भनिंदैछ कि संसारका उपरोक्त वर्णित कुराहरूमा नै नहराउनु, बरु उनीभन्दा श्रेष्ठ त त्यो जीवन तथा त्यसको कृपा छ, जो प्रभुको निकट छ, जसका अधिकारी अल्लाहको भयले भयभीत हुनेवाला छन्। यसकारण अल्लाहसित तर्स। यदि यो तिमी भित्र उत्पन्न भयो भने, निःसन्देह संसार र परलोकका सारा भलाईहरू (पुण्य) प्राप्त गर्नेछौ ।

[2]पवित्रको अर्थ हो कि त्यो सांसारिक अपवित्रता अर्थात् मैलोफोहोर, मासिक धर्म, र अन्य दूषणबाट पवित्र हुनेछन् र सुशील एवं सुचरित्र हुनेछन्। यसकारण आउँदा दुई आयतहरूमा अल्लाहको भयसित भयभीत हुनेहरूको विशेषताको वर्णन छ।

[3]शहादतको अर्थ वर्णन गर्नु तथा सूचित गर्नु हो। अर्थात अल्लाह तआलाले जे-जति उत्पन्न तथा वर्णित गर्‍यो, त्यसद्वारा उसले आफु एक हुने कुरातिर हाम्रो मार्ग-दर्शन गर्‍यो। (फ़तहुल क़दीर) फरिश्ता तथा ज्ञानीहरू पनि त्यसको एक हुने कुराको गवाही (साक्ष्य) दिनछन्। यसमा ज्ञानीहरूको विशेषता तथा श्रेष्ठता छ कि अल्लाह तआलाले आफ्ना फरिश्ताहरूका नामका साथ उनीहरूको वर्णन गरेको छ, तर यसबाट तात्पर्य मात्र ती नै ज्ञानी छन् जो कुरआन तथा हदीसबारे ज्ञान राख्दछन्। (फ़तहुल क़दीर)

الْعَزِيزُ الْحَكِيمُ ۝١٨

त्यही सर्वशक्तिमान, निर्णयकर्ता छ, त्यसबाहेक कोही आराधनाको योग्य छैन ।

إِنَّ الدِّينَ عِندَ اللَّهِ الْإِسْلَامُ ۗ وَمَا اخْتَلَفَ الَّذِينَ أُوتُوا الْكِتَابَ إِلَّا

(१९) निश्चय अल्लाह छेउ मनपर्दो धर्म, इस्लाम नै हो ।[1] (अल्लाहप्रति पूर्ण आत्म समर्पण)

[1]इस्लाम त्यही धर्म हो, जसको प्रचार एवं शिक्षा प्रत्येक ईशदूतले आफ्नो युगमा दिने गरे तथा अब यो त्यसको पूर्णस्वरुप हो जसलाई अन्तिम ईशदूत मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम संसार समक्ष प्रस्तुत गरिराख्नु भएको छ । जसमा एकेश्वरवाद, दूतत्व तथा परलोकप्रति यसप्रकार विश्वास गर्नु हो जस्तो उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएको छ, अब मात्र यो विश्वास गर्नु कि अल्लाह (परमेश्वर) एक छ अथवा केही सत्कर्म गर्नु इस्लाम होइन, न यसबाट परलोकमा मोक्ष प्राप्त हुनेछ । विश्वास तथा धर्म यो हो कि अल्लाहलाई एक मानियोस मात्र त्यसै एक पूज्यको उपासना गरियोस्, मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम समेत सबै ईशदूतहरूप्रति विश्वास गरियोस् तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि दूतत्वको समापन मानियोस् तथा आस्थाको साथ ती विश्वास एवं कर्म ग्रहण गरियून् जुन कुरआन तथा ईशदूतको कथन (हदीस) मा वर्णित छन् । अब यस धर्म इस्लाम बाहेक कुनै अन्य धर्म अल्लाहकहाँ स्वीकृत हुने छैन ।

﴿وَمَن يَبْتَغِ غَيْرَ الْإِسْلَامِ دِينًا فَلَن يُقْبَلَ مِنْهُ وَهُوَ فِي الْآخِرَةِ مِنَ الْخَاسِرِينَ﴾ [آل عمران: ٨٥]

"र जो व्यक्ति इस्लामका अतिरिक्त कुनै अरु धर्म रोज्छ, त्यसको धर्म मान्य हुनेछैन र परलोकमा त्यो क्षतिग्रस्तहरूमा हुनेछ ।"

﴿قُلْ يَا أَيُّهَا النَّاسُ إِنِّي رَسُولُ اللَّهِ إِلَيْكُمْ جَمِيعًا﴾

"भनिदिनुस् कि हे मानिसहरू ! म तिमी सबैतिर अल्लाहको दूत हूँ ।" (सूर: आराफ़-१५८)

﴿تَبَارَكَ الَّذِي نَزَّلَ الْفُرْقَانَ عَلَىٰ عَبْدِهِ لِيَكُونَ لِلْعَالَمِينَ نَذِيرًا﴾

"शुभ छ त्यो जसले आफ्नो भक्तमाथि फुरकान (विवेकारी शास्त्र) अवतरित गऱ्यो ताकि त्यो जगतलाई सावधान गरोस्"। (अल-फ़ुरकान-१)

उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो: त्यस अल्लाहको सौगन्ध जसको हाथमा मेरो प्राण छ जो यहूदी अथवा इसाई ममाथि विश्वास नगरीकनै मर्छ, त्यो नरकीय हुने छ । (सहीह मुस्लिम) यो पनि भन्नुभयो कि म रातो, कालो (सबै मानव) का लागि पठाइएको हूँ, यसैकारण उहाँले आफ्ना युगका सबै राजाहरूलाई पत्र लेखि उनीहरूलाई इस्लाम धर्म स्वीकार गर्ने आमन्त्रण दिनुभयो । (सहीहैन, माध्यम इब्ने कसीर)

مِنۢ بَعۡدِ مَا جَآءَهُمُ ٱلۡعِلۡمُ بَغۡيَۢا بَيۡنَهُمۡۗ وَمَن يَكۡفُرۡ بِـَٔايَٰتِ ٱللَّهِ فَإِنَّ ٱللَّهَ سَرِيعُ ٱلۡحِسَابِ ١٩

तथा जुन धर्मशास्त्र प्रदान गरियो, उनीहरूले ज्ञान आए पश्चात त्यसमा परस्पर द्वेषको कारण मतभेद गरे ।[1] तथा जो अल्लाहका आयतहरू (पवित्र कुर्.आन) लाई मान्दैन[2] त (उनीसित) अल्लाहले शीघ्र हिसाब लिनेछ ।

فَإِنۡ حَآجُّوكَ فَقُلۡ أَسۡلَمۡتُ وَجۡهِيَ لِلَّهِ وَمَنِ ٱتَّبَعَنِۗ وَقُل لِّلَّذِينَ أُوتُواْ ٱلۡكِتَٰبَ وَٱلۡأُمِّيِّـۧنَ ءَأَسۡلَمۡتُمۡۚ فَإِنۡ أَسۡلَمُواْ فَقَدِ ٱهۡتَدَواْۖ وَّإِن تَوَلَّوۡاْ فَإِنَّمَا عَلَيۡكَ ٱلۡبَلَٰغُۗ وَٱللَّهُ بَصِيرُۢ بِٱلۡعِبَادِ ٢٠

(२०) यदि उनीहरू तपाईंसित विवाद गर्दछन् भने तपाईं भनिदिनुस् कि मैले तथा मेरा अनुयायीहरूले स्वयंलाई अल्लाहप्रति समर्पित गऱ्यौं तथा तपाईं शास्त्रधारीहरू एवं अशिक्षित मानिसहरूलाई[3] भन्नुस् कि के तिमी पनि इस्लाम स्वीकार गऱ्यौ ? यदि उनीहरूले इस्लाम स्वीकार गरे भने सोझो मार्ग प्राप्त गरे र यदि विमुख भए भने तपाईंको काम मात्र पुऱ्याउनु हो र अल्लाह स्वयं भक्तहरूलाई देखिराखेको छ ।

[1]उनीहरूको यस आपसी मतभेदको तात्पर्य त्यो मतभेद हो, जुन एकै धर्मलाई मान्नेवालाहरूले आपसमा उत्पन्न गरेका थिए । जस्तै यहूदीहरूका आपसी मतभेद तथा गुटबन्दी, यसैप्रकार इसाईहरूका आपसी मतभेद तथा गुटबन्दी । अनि ती मतभेदहरूको अर्थ पनि छ जुन किताबवालाहरूबीच आपसमा थियो । जसको आधारमा यहूदी, इसाईहरूलाई र इसाई यहूदीहरूलाई भन्ने गर्दथे कि "तिमी कुनै धर्ममा छैनौं ।" नबूअत मोहम्मदी तथा नबूअत ईसा पनि यसै अन्तर्गत आउँछ । परन्तु यी सबै मतभेद तर्कहीन थिए, मात्र द्वेष, ईर्ष्या तथा घृणाका कारण थिए अथवा ती मानिसहरू सत्यता जान्दा-जान्दै पनि मात्र आफ्ना विचारहरू तथा सांसारिक लाभका कारण गलत कुरामा अडिग रहे, र यसलाई धर्म भन्दथे । ताकि उनको सम्मान उच्च रहोस् र उनको जनतासितको आधार पनि बनिरहोस् । अफसोच् आज मुसलमानहरूका आलिमहरूको एउटा धेरै ठूलो संख्या ठीक तिनै गलत उद्देश्यका लागि त्यसै गलत मार्गमा हिंडिराखेका छन् ।

[2]यहाँ आयतहरूसित तात्पर्य, ती प्रतीक हुन् जुन इस्लामका ईश्वरीय धर्मलाई सिद्ध गर्दछन् ।

[3]अशिक्षित मानिसहरूसित तात्पर्य अरबका मूर्तिपूजक हुन्, जो किताब प्रदान गरिएका तुलनामा अशिक्षित थिए ।

إِنَّ الَّذِينَ يَكْفُرُونَ بِآيَاتِ اللَّهِ وَيَقْتُلُونَ النَّبِيِّينَ بِغَيْرِ حَقٍّ وَيَقْتُلُونَ الَّذِينَ يَأْمُرُونَ بِالْقِسْطِ مِنَ النَّاسِ فَبَشِّرْهُم بِعَذَابٍ أَلِيمٍ ﴿٢١﴾

(२१) नि:सन्देह जुन मानिसहरू अल्लाह (तआ़ला) का आयतहरुबाट इन्कार गर्दछन्, र ईशदूतहरू (अम्बिया) लाई अवैध हत्या गर्दछन्, तथा जुन मनिसहरू न्यायका कुरा गर्दछन्, उनीहरूलाई पनि मार्दछन् ।[१] त (हे नबी !) तपाईं उनीहरूलाई घोर यातनाहरूबारे सूचित गरिदिनुस् ।

أُولَٰئِكَ الَّذِينَ حَبِطَتْ أَعْمَالُهُمْ فِي الدُّنْيَا وَالْآخِرَةِ وَمَا لَهُم مِّن نَّاصِرِينَ ﴿٢٢﴾

(२२) उनैका (पुण्य) कर्मलोक तथा परलोकमा व्यर्थ भएर गए तथा यिनीहरूको कोही सहायक पनि छैन ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ أُوتُوا نَصِيبًا مِّنَ الْكِتَابِ يُدْعَوْنَ إِلَىٰ كِتَابِ اللَّهِ لِيَحْكُمَ بَيْنَهُمْ ثُمَّ يَتَوَلَّىٰ فَرِيقٌ مِّنْهُمْ وَهُم مُّعْرِضُونَ ﴿٢٣﴾

(२३) के तपाईंले उनीहरूलाई देख्नुभएन, जसलाई किताबको एक भाग दिइएको छ, उनीहरू आफ्ना निर्णयका लागि अल्लाह (तआ़ला) को किताबतिर आमन्त्रित गरि न्छन्, तैपनि उनीहरूको एक समूह उपेक्षा गर्दै फर्कन्छ ।[२]

ذَٰلِكَ بِأَنَّهُمْ قَالُوا لَن تَمَسَّنَا النَّارُ إِلَّا أَيَّامًا مَّعْدُودَاتٍ وَغَرَّهُمْ

(२४) यसको कारण उनीहरूको यो भनाई हो कि उनीहरूलाई गिन्तीका केही दिनमा मात्र आगोले स्पर्श गर्नेछ, यो उनका मनगढन्त कुराले उनीहरुलाई

[१]अर्थात् उनीहरूको दुष्टता एवं विद्रोह यति बढिसकेको थियो कि उनीहरूले मात्र नबीहरूको हत्या अनुचित रूपले गर्दैनथे बरु तिनीहरूको पनि हत्या गर्दथे, जसले न्यायका कुरा गर्दथे । अर्थात् उनीहरू ईमानवाला, नि:स्वार्थ सत्यतिर आमन्त्रण दिनेवालाहरूलाई जो सत्कर्म गर्न भन्थे र कुकर्मबाट रोक्दथे, हत्या गरिदिन्थे । नबीहरूको साथमा उनीहरूको वर्णन गरी अल्लाह तआ़लाले उनीहरूको श्रेष्ठता तथा विशेषता पनि स्पष्ट गरिदियो ।

[२]यी किताबवालाहरूसित तात्पर्य ती मदीनाका निवासी हुन्, जसका बहुमत इस्लाम धर्म स्वीकार गर्ने योग्य थिएन र इस्लाम, मुसलमानहरू र नबी सल्लल्लाहु अलैहि वसल्लमका विरोधमा कुचक्रहरू उत्पन्न गर्नमा ब्यस्त रहे, यहाँसम्मकि उनीहरूका दुई समूहहरूलाई देश निष्कासन तथा एक गिरोहको हत्या गरियो ।

فِي دِينِهِم مَّا كَانُوا يَفْتَرُونَ ﴿٢٤﴾

उनको धर्मको विषयमा जुन उनीहरू रच्दै आइरहेका छन् धोकामा पारिदिएको छ ।[1]

فَكَيْفَ إِذَا جَمَعْنَاهُمْ لِيَوْمٍ لَّا رَيْبَ فِيهِ وَوُفِّيَتْ كُلُّ نَفْسٍ مَّا كَسَبَتْ وَهُمْ لَا يُظْلَمُونَ ﴿٢٥﴾

(२५) अनि के दशा हुनेछ जब उनीहरूलाई हामीले त्यस दिन एकत्रित गर्नेछौं, जसको आगमनमा कुनै शंका छैन र प्रत्येक व्यक्तिलाई आफूले गरेको पूर्ण प्रतिफल दिइनेछ, र उनीमाथि अत्याचार गरिने छैन ।[2]

قُلِ اللَّهُمَّ مَالِكَ الْمُلْكِ تُؤْتِي الْمُلْكَ مَن تَشَاءُ وَتَنزِعُ الْمُلْكَ مِمَّن تَشَاءُ وَتُعِزُّ مَن تَشَاءُ وَتُذِلُّ مَن تَشَاءُ ۖ بِيَدِكَ الْخَيْرُ ۖ إِنَّكَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٢٦﴾

(२६) तपाईं भन्नुस्, हे अल्लाह ! हे सम्पूर्ण जगत्को स्वामी ! तिमी जसलाई चाहन्छौ राज्य दिन्छौ र जसलाई चाहन्छौ, राज्यबाट बञ्चित गर्दछौ र तिमी जसलाई चाहन्छौ सम्मान दिन्छौ र जसलाई चाहन्छौ अपमानित गर्दछौ, तिम्रै हातमा सारा भलाईहरू (कल्याण) छन् ।[3] निःसन्देह तिमी प्रत्येक कुरामाथि सामर्थ्य राख्दछौ ।

[1]अल्लाहको किताब (धर्मशास्त्र) लाई नमान्नु एवं त्यसबाट विमुखताको कारण उनीहरूको यो मिथ्यापूर्ण विचार थियो कि उनीहरू नरकमा जाँदै-जाँदैनन् तथा यदि गएपनि केही दिनको लागि जानेछन् । र यिनै काल्पनिक कुराहरूले उनीहरूलाई धोका एवं भ्रान्तिमा पारेको छ ।

[2]प्रलयका दिन उनीहरुको यो दाबी तथा भ्रम कुनै काम लाग्ने छैन र अल्लाह स्पष्टरुपले न्याय गर्नेछ तथा प्रत्येक प्राणीलाई पूरा-पूरा प्रतिफल प्रदान गर्नेछ, कसैमाथि अत्याचार गर्ने छैन ।

[3]यस आयतमा अल्लाहको अपार सामर्थ्य तथा शक्तिको वर्णन छ । राजालाई रंक र रंकलाई राजा बनाइदिने अधिकार उसैलाई छ الخَيْرُ بِيَدِكَ को स्थानमा بِيَدِكَ الخير (सूचनाको प्रथमिकताका साथ) सित तात्पर्यको विशेषता देखाउनु हो, अर्थात भलाईहरू मात्र तिम्रै हातमा छन्, तिमी बाहेक अरु कोही भलाई दिन सक्दैन । शर (नराम्रोपना) को उत्पत्ति कर्ता पनि यद्यपि अल्लाहनै हो, परन्तु यहाँ मात्र ख़ैर (भलाई) को वर्णन गरियो । शर (नराम्रो) को होइन, यसकारण कि भलाई मात्र अल्लाहको कृपा हो, यसको विपरीत नराम्रोपन मानिसको आफ्नो कर्मको प्रतिफल हो जुन उसले पाउँछ अथवा यसकारण कि नराम्रो पनि उसको भाग्यलेख को एक अंश हो जसमा भलाई यसप्रकार छ कि अल्लाहका सबै कार्य राम्रा छन् । (फ़तहुल क़दीर)

تُوْلِجُ الَّيْلَ فِي النَّهَارِ وَ تُوْلِجُ النَّهَارَ فِي الَّيْلِ وَتُخْرِجُ الْحَيَّ مِنَ الْمَيِّتِ وَتُخْرِجُ الْمَيِّتَ مِنَ الْحَيِّ وَتَرْزُقُ مَنْ تَشَاءُ بِغَيْرِ حِسَابٍ ۝٢٧

(२७) तिमी नै रातलाई दिनमा प्रवेशित गर्दछौ र दिनलाई रातमा प्रविष्ट गर्दछौ ।[1] तिमी नै निर्जीवबाट जीव सृष्टि गर्दछौ,[2] तिमी नै हौ कि जसलाई चाहन्छौ अगणित जीविका प्रदान गर्दछौ ।

لَا يَتَّخِذِ الْمُؤْمِنُونَ الْكٰفِرِينَ أَوْلِيَاءَ مِنْ دُونِ الْمُؤْمِنِينَ ۚ

(२८) मोमिनहरूलाई आवश्यक छ कि निष्ठावानहरूलाई छाडि अस्वीकार गर्नेहरूलाई आफ्ना मित्र नबनाऊन् ।[3]

[1]रातलाई दिनमा र दिनलाई रातमा प्रवेश दिनुको अर्थ मौसमको परिवर्तन हो । एउटा मौसममा रात लामो हुन्छ, त दिन छोटो हुन्छ र अर्को मौसममा यसको विपरीत दिन लामो हुन्छ र रात छोटो हुन्छ । अर्थात कहिले रातको भाग दिनमा र दिनको भाग रातमा प्रविष्ट गर्दछ, जसबाट रात र दिन सानो-ठूलो हुन्छन् ।

[2]जस्तो वीर्य (निर्जीव) प्रथम जीवित व्यक्तिबाट निस्कन्छ र पछि त्यस निर्जीव (वीर्यबाट) मनुष्य । यसैप्रकार निर्जीव अण्डाबाट जीवित पोथी कुखुरा र फेरि जीवित कुखुराबाट निर्जीव अण्डा अथवा काफिरबाट मोमिन र मोमिनबाट काफिर पैदा गर्दछ । केही कथनहरूमा छ कि आदरणीय मुआज़ रजी अल्लाह अन्हुले नबी सल्लल्लाहु अलैहि वसल्लमसित आफूमाथि ऋणको शिकायत गर्दा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो: कि तिमी आयत ( قُلِ اللّٰهُمَّ الخ ) पढेर यो दुआ गर्ने गर ।

( رَحْمٰنَ الدُّنْيَا وَ رَحِيْمَهُمَا ! تُعْطِي مَنْ تَشَاءُ مِنْهُمَا وَتَمْنَعُ مَنْ تَشَاءُ، إِرْحَمْنِي رَحْمَةً تُغْنِي بِهَا عَنْ رَّحْمَةِ مَنْ سِوَاكَ، اَللّٰهُمَّ أَغْنِنِي مِنَ الْفَقْرِ، وَاقْضِ عَنِّي الدَّيْنَ)

"एक अर्को कथनमा छ कि "यो यस्तो प्रार्थना हो कि तिमीमाथि ओहद (पर्वत जुन मदीनाको उत्तर दिशामा पर्वतीय श्रृङ्खला छ) जति पनि ऋण भए अल्लाह तआला त्यसलाई तिर्ने प्रबन्ध तिम्रो लागि गर्नेछ ।" (मजमउज्जवायेद १०/१८६)

[3]औलिया, वलीको बहुवचन हो । वली यस्तो मित्रलाई भन्छन् जससित हार्दिक प्रेम एवं विशेष सम्बन्ध छ । जस्तै अल्लाह तआलाले आफूलाई ईमानवालाहरूको वली भनेको छ ।

﴿ اَللّٰهُ وَلِيُّ الَّذِيْنَ اٰمَنُوْا ﴾

"अल्लाह ईमानवालहरूका वली हो ।" (अल-बकर:-२५७)

अर्थात् ईमानवालाहरूको एक-अर्कासित प्रेम तथा विशेष सम्बन्ध छ र उनीहरु आपसमा एक-अर्काको वली (मित्र) हुन् । अल्लाह तआलाले यहाँ ईमानवालाहरूलाई यस कुरोबाट कठोरताले मनाही गरेको छ कि उनीहरू काफिरहरूलाई आफ्ना मित्र नबनाउन् । किनभने काफ़िरहरू अल्लाह तआलाका पनि शत्रु हुन् र ईमानवालाहरूका पनि शत्रु हुन् । तसर्थ उनीहरूलाई मित्र बनाउने प्रश्न पनि कसरी उठाउन सकिन्छ ? यसैकारण अल्लाह तआलाले यस विषयलाई कुरआन करीममा कैयौं स्थानमा स्पष्टरुपले वर्णित गरेको छ, ताकि ईमानवालाहरूले काफ़िरहरूसित मित्रता र विशेष सम्बन्ध स्थापित नगरुन् । परन्तु आवश्यकता अनुसार उनीहरूसित सन्धि हुनसक्छ र व्यापारिक लेनदेन पनि । यसैप्रकार जो काफ़िर मुसलमानहरूका शत्रु होइनन्, उनीसित राम्रा

وَمَنْ يَّفْعَلْ ذٰلِكَ فَلَيْسَ مِنَ اللّٰهِ فِيْ شَيْءٍ اِلَّآ اَنْ تَتَّقُوْا مِنْهُمْ تُقٰىةً ۗ وَيُحَذِّرُكُمُ اللّٰهُ نَفْسَهٗ ۗ وَاِلَى اللّٰهِ الْمَصِيْرُ ﴿٢٨﴾

र जसले यस्तो गर्नेछ, त्यो अल्लाहको कुनै पक्षमा छैन, परन्तु यो कि उनका आतङ्कबाट कुनै प्रकारको रक्षाको लक्ष्य होस् ।[1] र अल्लाह (तआला) स्वयं तिमीलाई आफूबाट तर्साउँछ र अल्लाह (तआला) तिर नै फर्किजानु छ ।

قُلْ اِنْ تُخْفُوْا مَا فِيْ صُدُوْرِكُمْ اَوْ تُبْدُوْهُ يَعْلَمْهُ اللّٰهُ ۗ وَيَعْلَمُ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۗ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٢٩﴾

(२९) भनिदिनुस् कि तिमी चाहे आफ्ना हृदयका कुरा लुकाउ अथवा स्पष्ट गर, अल्लाह (तआला) सबै जान्दछ, आकाशहरु र धर्तीमा जे-जति छ सबै उसलाई थाहा छ, अल्लाह (तआला) प्रत्येक वस्तुमाथि प्रभुत्वशाली छ ।

يَوْمَ تَجِدُ كُلُّ نَفْسٍ مَّا عَمِلَتْ مِنْ خَيْرٍ مُّحْضَرًا ۚ وَّمَا عَمِلَتْ مِنْ سُوْٓءٍ ۚ تَوَدُّ لَوْ اَنَّ بَيْنَهَا وَبَيْنَهٗٓ اَمَدًا بَعِيْدًا ۗ وَيُحَذِّرُكُمُ اللّٰهُ نَفْسَهٗ ۗ وَاللّٰهُ رَءُوْفٌۢ بِالْعِبَادِ ﴿٣٠﴾

(३०) जुन दिन प्रत्येक प्राणी (व्यक्ति) आफूद्वारा गरिएको सुकर्म तथा कुकर्मलाई उपस्थित पाउनेछ, त्यसबेला कामना गर्नेछ कि काश ! उसको र पाप बीच धेरै दूरी भइदिए हुन्थ्यो । अल्लाह (तआला) स्वयं आफूबाट तर्साइरहेछ र अल्लाह (तआला) आफ्ना भक्तहरूमाथि अत्यधिक कृपालु छ ।

قُلْ اِنْ كُنْتُمْ تُحِبُّوْنَ اللّٰهَ فَاتَّبِعُوْنِيْ

(३१) भनिदिनुस् यदि तिमी अल्लाह (तआला) सित प्रेम गर्दछौ भने मेरो अनुसरण गर ।[2]

व्यवहार र शिष्टाचार उचित पनि छ (जसको सविस्तार वर्णन सूर: मुमतहिन:मा छ) किनभने यी सबै कुरा मित्रता तथा प्रेमभन्दा भिन्दै छन् ।

[1]यो आज्ञा ती मुसलमानहरूका लागि हो, जो कुनै काफ़िर राज्यमा बस्दछन् र उनीसित मित्रता व्यक्त नगरी उनको आतङ्कबाट बच्नु असम्भव नहोस्, त उनी तिनीहरूसित मौखिक मित्रता गर्न सक्छन् ।

[2]यहूदी र इसाई दुबैको यो दाबी थियो कि हामी अल्लाह तआलासित र अल्लाह तआला हामीसित प्रेम गर्दछ । विशेषरुपले इसाईहरूले आदरणीय ईसा र मरियम अलैहिस्सलामको आदर तथा प्रेममा अति अतिश्योक्ति गरिदिए कि उनलाई पूज्य देवको स्थानमा पदासीन गरिदिए ।

ر स्वयं अल्लाह (तआला) तिमीसित प्रेम गर्नेछ र तिम्रो पाप क्षमा गरिदिनेछ ।[1] र अल्लाह (तआला) अत्याधिक क्षमाशील कृपालु छ ।

يُحْبِبْكُمُ اللّٰهُ وَيَغْفِرْ لَكُمْ ذُنُوْبَكُمْ ۚ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ۝٣١

(३२) भनिदिनुस् कि अल्लाह (तआला) र रसूलको आज्ञाको पालन गर, यदि उनीहरु मुख फर्काउन्छन् भने निःसन्देह अल्लाह (तआला) अस्वीकार गर्नेहरुलाई मित्र बनाउदैन ।[2]

قُلْ اَطِيْعُوا اللّٰهَ وَالرَّسُوْلَ ۚ فَاِنْ تَوَلَّوْا فَاِنَّ اللّٰهَ لَا يُحِبُّ الْكٰفِرِيْنَ ۝٣٢

यसको विषयमा पनि उनीहरुको विचार थियो कि यसद्वारा हामी अल्लाहको निकटता तथा प्रसन्नताका अधिकारी बन्न चाहन्छौं । अल्लाह (तआला) को आदेश भयो : कि उनीहरुका दाबी र स्वयंले रचिएका विधिहरुबाट अल्लाहको प्रसन्नता तथा प्रेम प्राप्त गर्न सकिंदैन । त्यसको मात्र एक मार्ग यो छ कि मेरा अन्तिम पैगम्बरमा विश्वास गर र त्यसको अनुसरण गर । यस आयतले ती सबै प्रेमका दाबी गर्नेहरुका लागि एउटा कसी र एउटा मापदण्ड उपलब्ध गराइदियो कि अल्लाहको प्रेमको अर्थ यदि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको अनुसरणद्वारा यो फल प्राप्त गर्न चाहेको छ, त सफल छ र आफ्नो दाबीको साँचो छ, अन्यथा त्यो झूठो पनि छ र आफ्नो लक्ष्यलाई प्राप्त गर्न असफल पनि । नबी सल्लल्लाहु अलैहि वसल्लमको कथन छ :

(مَنْ عَمِلَ عَمَلاً لَيْسَ عَلَيْهِ أَمْرُنَا فَهُوَ رَدٌّ)

"जसले यस्तो काम गऱ्यो जससित हाम्रो सम्बन्ध छैन, अर्थात् हाम्रो मार्गबाट भिन्न छ, त त्यो रद्द गरिनेछ । (मुत्तफ़क अलैह)

[1]अर्थात् रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको अनुकरण गर्नाको कारण केवल तिम्रा पापलाई क्षमा गरिने छैन, बरु तिमी आफ्नो प्रेमीको प्रेमी बन्नेछौ । त यो कति श्रेष्ठ स्थान छ कि अल्लाह समक्ष एउटा मुनष्य अल्लाहको प्रेमीको स्थान प्राप्त गरोस् ।

[2]यस आयतमा अल्लाहको आज्ञा पालनको साथ-साथ रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको अनुकरण गर्न फेरिबाट पुनरावृत्ति गरी यो स्पष्ट गरिएको छ कि अब मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको अनुकरण नगरिकन मोक्ष प्राप्त हुनसक्दैन । र यसलाई नकार्नु कुफ्र हो । र यस्ता काफ़िरहरुलाई अल्लाह तआला रुचाउँदैन । उनीहरु अल्लाहको प्रेम तथा निकटताको जति दावेदार भएपनि । यस आयतमा हदीस अस्वीकार गर्नेहरु र रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका

إِنَّ اللَّهَ اصْطَفَىٰ آدَمَ وَنُوحًا وَآلَ إِبْرَاهِيمَ وَآلَ عِمْرَانَ عَلَى الْعَالَمِينَ ﴿٣٣﴾

(३३) नि:सन्देह अल्लाह (तआ़ला) ले सबै मानिसहरूमध्ये आदम, नूह, इब्राहीमको परिवार र इमरानको परिवारलाई रोज्यो ।[1]

ذُرِّيَّةً بَعْضُهَا مِنْ بَعْضٍ ۗ وَاللَّهُ سَمِيعٌ عَلِيمٌ ﴿٣٤﴾

(३४) कि यी सबै आपसमा एक-अर्काको वंशबाट हुन् ।[2] र अल्लाह (तआ़ला) सुन्दछ र जान्दछ ।

---

अनुसरण नगर्नेहरूको कटु-आलोचना गरिएको छ किनभने दुवैले आ-आफ्नो रूपले यस्ता कर्म गर्दछन्, जसलाई यहाँ कुफ्र समान भनिएको छ ।

[1]नबीहरूको परिवारमा दुई इमरान छन् । एक आदरणीय मूसा र हारूनका पिता र दोस्रो आदरणीय मरियमका पिता । यस आयतमा अधिकतर व्याख्याकारहरूका अनुसार दोस्रो इमरानसित तात्पर्य छ, र यस परिवारलाई यो सर्वश्रेष्ठ सम्मानित स्थान आदरणीय मरियम र उनका पुत्र आदरणीय ईसाको कारण प्राप्त भयो । र आदरणीय मरियमको माताको नाम व्याख्याकारहरूले "हन्ना पुत्री फाकूज़" लेखेका छन् । (तफ़सीर क़ुर्तबी तथा इब्ने क़सीर) यस आयतमा अल्लाह (तआ़लाले) इमरानको परिवारका अतिरिक्त अन्य दुई परिवारहरूको वर्णन गरेको छ, जसलाई अल्लाह तआ़लाले उनीहरूको समयमा अन्य परिवारहरूभन्दा श्रेष्ठता प्रदान गरेको छ । यिनीहरूमा सर्वप्रथम आदरणीय आदम छन्, जसलाई अल्लाहले आफ्ना हातले सृष्टि गर्‍यो र उनमा आफ्नो तर्फबाट आत्मा फुक्यो, उनी समक्ष फरिश्ताहरूसित दण्डवत (सजदा) गरायो, विभिन्न कुराको ज्ञान उनलाई प्रदान गर्‍यो र उनको निवास स्वर्गमा बनायो, जहाँबाट उनलाई धर्तीमा पठाइयो, जसमा त्यसका धेरै बुद्धिमत्ताहरू थिए । द्वितीय आदरणीय नूह अलैहिस्सलाम हुन्, उनलाई त्यसबेला रसूल बनाएर पठाइयो, जब मानिसहरू अल्लाहलाई छाडि मूर्तिपूजक बनेका थिए, उनलाई दीर्घ आयु प्रदान गरियो, उनले आफ्ना समाजका मानिसहरूलाई साढे नौ सय वर्ष चेतावनी दिए तर केही मानिस छाडेर उहाँमाथि कसैले विश्वास गरेन । अन्ततः उहाँको प्रार्थनाको कारण ईमानवालाहरूलाई छाडि शेष सबैलाई डुबाइयो । इब्राहीमका सन्तानलाई यो श्रेष्ठता प्रदान गरियो कि उनमा नै सबै नबीहरूको श्रृंखला स्थापित गर्‍यो र अधिकतर पैग़म्बर (ईशदूत) उहाँको वशंबाट थिए । अन्तमा सर्वश्रेष्ठ र आदरणीय मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम पनि आदरणीय इब्राहीमका पुत्र इस्माईलको वशं श्रृंखलामा हुनुभयो ।

[2]अथवा अन्य अर्थ छन्, धर्ममा एक-अर्काको सहायक ।

إِذْ قَالَتِ امْرَأَتُ عِمْرَٰنَ رَبِّ إِنِّي نَذَرْتُ لَكَ مَا فِي بَطْنِي مُحَرَّرًا فَتَقَبَّلْ مِنِّيٓ ۖ إِنَّكَ أَنتَ السَّمِيعُ الْعَلِيمُ ﴿٣٥﴾

(३५) जब इमरानकी पत्नीले भनिन् कि हे मेरो पालनकर्ता ! मेरो गर्भमा जे-जति पनि छ, त्यसलाई तिम्रो नाममा स्वतन्त्र गर्न[1] भाकल गरेकी छु, तसर्थ तिमी यसलाई स्वीकार गर, निःसन्देह तिमी राम्रो सर्वश्रोता तथा सर्वज्ञाता हौ ।

فَلَمَّا وَضَعَتْهَا قَالَتْ رَبِّ إِنِّي وَضَعْتُهَآ أُنثَىٰ وَاللَّهُ أَعْلَمُ بِمَا وَضَعَتْ وَلَيْسَ الذَّكَرُ كَالْأُنثَىٰ ۖ وَإِنِّي سَمَّيْتُهَا مَرْيَمَ وَإِنِّيٓ أُعِيذُهَا بِكَ وَذُرِّيَّتَهَا مِنَ الشَّيْطَٰنِ الرَّجِيمِ ﴿٣٦﴾

(३६) जब शिशुलाई जन्म दिइन्, तब भनिन् हे प्रभु ! मलाई पुत्री जन्मेको छ, अल्लाह (तआला) राम्ररी जान्दछ कि के जन्म दिएकी छिन्, र पुत्र, पुत्री जस्तो हुन सक्दैन ।[2] मैले त्यसको नाम मरियम राखेको छु ।[3] म त्यसलाई र त्यसका सन्तानलाई धिक्कृत शैतानबाट तिम्रो शरणमा दिन्छु ।[4]

[1] محررا (तिम्रो नाममा स्वतन्त्र) को अर्थ तिम्रो धर्मस्थलीको सेवाको लागि अर्पित गर्दछु ।

[2] यस वाक्यमा निराशाको स्पष्टीकरण छ र याचना पनि । निराशा यसप्रकार कि मेरो आशा विपरीत पुत्री जन्मेकी छ । र याचना यसप्रकार कि भाकल अनुसार म तिम्रो प्रसन्नता प्राप्त गर्नको निम्ति एक सेवक अर्पण गर्न चाहेकि थिएँ, जुन कार्यको लागि एउटा पुरुष नै उचित थियो, तर अब जे-जति छ, तिमीलाई त थाहा नै छ, त्यसलाई स्वीकार गर । (फ़तहुल क़दीर)

[3] हाफ़िज़ इब्ने क़सीरले यसबाट र नबी सल्लल्लाहु अलैहि वसल्लमका हदीसहरूबाट यो भावार्थ निकाल्दै लेख्नु भएको छ कि सन्तानको नाम जन्मको प्रथम दिनमै राख्नुपर्छ र सातौं दिन नाम राख्ने हदीसलाई जीर्ण सिद्ध गर्नुभएको छ । तर हाफ़िज़ इब्ने कैय्यिमले सबै हदीसहरूमा विवाद गर्दै अन्तमा लेख्नु भएको छ कि पहिलो दिन, तेस्रो दिन र सातौं दिनमा नाम राख्न सकिन्छ । यसमा गुंजाईश छ । (तोहफतुल मोदूद)

[4] अल्लाह तआलाले यो प्रार्थना स्वीकार गऱ्यो जस्तो कि सहीह हदीसहरूमा छ कि जब बच्चा जन्म लिन्छ, तब शैतान त्यसलाई छुन्छ जसले त्यो कराउँछ । तर अल्लाह तआलाले आदरणीय मरियम तथा उनका पुत्र ईसालाई यसबाट सुरक्षित राखेको छ ।

«مَا مِنْ مَوْلُودٍ يُولَدُ إِلَّا مَسَّهُ الشَّيْطَانُ حِينَ يُولَدُ، فَيَسْتَهِلُّ صَارِخًا مِنْ مَسِّهِ إِيَّاهُ، إِلَّا مَرْيَمَ وَابْنَهَا»

(सहीह बुख़ारी, किताबुल तफ़सीर, मुस्लिम किताबुल फज़ायल)

فَتَقَبَّلَهَا رَبُّهَا بِقَبُولٍ حَسَنٍ وَأَنْبَتَهَا نَبَاتًا حَسَنًا وَكَفَّلَهَا زَكَرِيَّا ۖ كُلَّمَا دَخَلَ عَلَيْهَا زَكَرِيَّا الْمِحْرَابَ وَجَدَ عِنْدَهَا رِزْقًا ۖ قَالَ يَا مَرْيَمُ أَنَّىٰ لَكِ هَٰذَا ۖ قَالَتْ هُوَ مِنْ عِنْدِ اللَّهِ ۖ إِنَّ اللَّهَ يَرْزُقُ مَنْ يَشَاءُ بِغَيْرِ حِسَابٍ ﴿٣٧﴾

(३७) तिनलाई तिनको प्रभुले राम्रो प्रकारले स्वीकार गऱ्यो र तिनको सर्वश्रेष्ठ पालन-पोषण गरायो । तिनको संरक्षक जक़रियालाई नियुक्त गऱ्यो[1] जुनबेला ज़करिया तिनको कोठामा जान्थे त तिनको पासमा जीविका राखिएको पाउँदथे ।[2] उनी सोध्थे कि हे मरियम ! तिम्रो पासमा यो जीविका कहाँबाट आयो ? उनी उत्तर दिन्थिन् कि यो अल्लाह (तआ़ला) को तर्फबाट हो, निःसन्देह अल्लाह (तआ़ला) जसलाई चाहन्छ, अनगिन्ती (बेहिसाब) जीविका प्रदान गर्दछ ।

[1]आदरणीय ज़करिया मरियमका मौसा (आमातिरको काका) पनि थिए, यसकारण पनि । यसका अतिरिक्त आफ्नो समयमा पैग़म्बर हुनुको कारण सर्वश्रेष्ठ संरक्षक बन्नसक्थे, जसले आदरणीय मरियमका आर्थिक आवश्यकताहरू, तथा शैक्षिक एवं नैतिक प्रशिक्षणको उचित प्रबन्ध गर्न सक्दथे ।

[2]मेहराबसित तात्पर्य त्यो कोठा हो जसमा आदरणीया मरियम बस्ने गर्थिन् । रिज़कबाट तात्पर्य फल आदि छन् । यी फल बिना मौसम फल्ने गर्दथे अर्थात् गर्मीका फल चिसो याममा र चिसो समयका फल गर्मीहरूमा उनका कोठामा हुने गर्दथे । दोस्रो आवश्यक कुरो यी कुरालाई भौतिक रूपले आदरणीय ज़करियाका अतिरिक्त कोही यसप्रकारका फल उनको कोठामा ल्याउन सक्दैनथ्यो, र उनी यी फलहरू ल्याएका हुँदैनथे, यसकारण चकित भई यो सोच्दथे कि यी कहाँबाट आए ? अदरणीय मरियमले उनलाई उत्तर दिइन् अल्लाहको तर्फबाट अर्थात यो आदरणीय मरियमको चमत्कार थियो । मोज़ज़ः र करामत अप्राकृतिक अथवा असम्भव कार्य हुने कुरोलाई भन्दछन् । अर्थात जुन प्रत्यक्ष एवं सामान्य संसाधनका विपरीत छन् । यो चमत्कार कुन नबीको हातमा प्रकाशित हुन्छ भने मोज़जः [वली (धर्मात्मा)] को हातबाट हुन्छ भने त्यसलाई करामत भनिन्छ । यी दुबै सत्य हुन्, यसमा कुनै सन्देह छैन । तर यी दुबै अल्लाहका आदेश र त्यसका इच्छाबाट हुन्छन् । नबी अथवा महात्माको अधिकारमा छैन कि त्यो स्वयं आफ्नो इच्छाले कुनै मोजज़ा अथवा करामत देखाउन सकोस् । यसकारण कि मोज़जः तथा करामत यस कुरालाई सिद्ध गर्दछन् कि यिनी आदरणीय व्यक्ति अल्लाह समक्ष एउटा विशेष स्थान राख्दछन् । परन्तु यसबाट यो सिद्ध हुँदैन कि यी महान भावहरुलाई यो अधिकार छ कि आफ्ना इच्छा अनुसार संसारमा जे चाहन्छन् गर्न सकुन् । जस्तो कि अहले बिदअत महात्माहरू (औलिया) का करामतबाट जनतालाई यो धोका दिएर उनीहरूलाई शिर्कमा विश्वास गर्न बाध्य गरिराखेका छन्, यसको अन्य विस्तारपूर्वक विवरण अन्य स्थानहरूमा मोजेजातको विषयमा आउनेछ ।

هُنَالِكَ دَعَا زَكَرِيَّا رَبَّهُ قَالَ رَبِّ هَبْ لِي مِن لَّدُنكَ ذُرِّيَّةً طَيِّبَةً إِنَّكَ سَمِيعُ الدُّعَاءِ ﴿٣٨﴾

(३८) त्यसै स्थानमा जकरिया (अलैहिस्सलाम) ले आफ्नो पालनकर्तासित प्रार्थना गरे, भने कि हे मेरो पालनकर्ता ! मलाई आफ्नो पासबाट पवित्र सन्तान प्रदान गर, निःसन्देह तिमी प्रार्थना सुन्दछौ ।

فَنَادَتْهُ الْمَلَائِكَةُ وَهُوَ قَائِمٌ يُصَلِّي فِي الْمِحْرَابِ أَنَّ اللَّهَ يُبَشِّرُكَ بِيَحْيَىٰ مُصَدِّقًا بِكَلِمَةٍ مِّنَ اللَّهِ وَسَيِّدًا وَحَصُورًا وَنَبِيًّا مِّنَ الصَّالِحِينَ ﴿٣٩﴾

(३९) अनि फरिश्ताहरूले आवाज़ दिए जबकि उनी कोठामा उभि नमाज़ पढिराखेका थिए कि अल्लाह (तआला) तिमीलाई यहियाको अवश्य सम्भावी शुभ-सूचना दिन्छ ।[1] जो अल्लाह (तआला) का कलिमाको वाणी पुष्टि गर्ने,[2] मुखिया (प्रमुख), परहेजगार र पूर्ण सयंमी र सत्कर्मीहरूमध्ये एउटा नबी हुनेछ ।

قَالَ رَبِّ أَنَّىٰ يَكُونُ لِي غُلَامٌ وَقَدْ بَلَغَنِيَ الْكِبَرُ وَامْرَأَتِي عَاقِرٌ ۖ قَالَ كَذَٰلِكَ اللَّهُ يَفْعَلُ مَا يَشَاءُ ﴿٤٠﴾

(४०) उनले भने कि मेरा प्रभु ! मकहाँ पुत्र कसरी जन्मने छ, म अत्यन्त बूढो भइसकेको छु र मेरी पत्नी बाँझो छे, भन्यो, यस्तै अल्लाह (तआला) जे चाहन्छ गर्दछ ।

[1]बिना मौसम फल देखेर आदरणीय जकरीयाको हृदयमा (आफु बृद्ध तथा आफ्नी पत्नी बाँझो भएपनि) यो आशा पलायो कि काश अल्लाह तआला उनलाई पनि यसैप्रकार सन्तान प्रदान गरोस् । यसैकारण उनका हात प्रार्थनाका लागि उठिहाले, जसलाई अल्लाह (तआला) ले स्वीकार पनि गऱ्यो र प्रदान पनि गऱ्यो ।

[2]अल्लाहका कलमाको पुष्टिसित तात्पर्य आदरणीय ईसाको अनुमोदन गर्नेछ । अर्थात आदरणीय यहिया आदरणीय ईसाभन्दा ठूला भए । दुबै आपसमा मौसेरे भाई (दिदी-बहिनीका छोरा) थिए । दुबैले एक-अर्काको अनुमोदन गरे । سيدا को अर्थ हो सरदार حصورا को अर्थ हो पापबाट विशुद्ध अर्थात पापका निकट नगएका, यसको अर्थ यो हो कि उनलाई पापबाट रोकिदिएको हो । अर्थात हसूर, महसूरको अर्थमा लिइएको छ । केही विद्धवानहरूले यसको अर्थ नपुंसक गरेका छन् । तर यो ठीक होइन किनभने यो एउटा त्रुटि हो, जबकि यहाँ उनको विशेषता, सम्मानको रूपमा प्रयोग भएको छ ।

(४१) उनले भने प्रभु ! मेरो निम्ति यसको कुनै चिन्ह बनाइदेउ, भन्यो, चिन्ह यो हो कि तीन दिनसम्म तिमी मानिसहरूसित कुरा गर्ने छैनौं, मात्र संकेतले बुझाउनेछौ, तिमी आफ्नो प्रभुको स्मरण अधिक गर र प्रातः र सन्ध्या उसैको महिमाको वर्णन गर ।[1]

قَالَ رَبِّ اجْعَلْ لِّيْٓ اٰيَةً ؕ قَالَ اٰيَتُكَ اَلَّا تُكَلِّمَ النَّاسَ ثَلٰثَةَ اَيَّامٍ اِلَّا رَمْزًا ؕ وَاذْكُرْ رَّبَّكَ كَثِيْرًا وَّ سَبِّحْ بِالْعَشِيِّ وَالْاِبْكَارِ ﴿۴۱﴾

(४२) र जब फरिश्ताहरूले भने, हे मरियम ! अल्लाह (तआला) ले तिमीलाई निर्वाचित (रोजेको) गरिसक्यो र तिमीलाई पवित्र गऱ्यो र सारा संसारका स्त्रीहरूमध्ये तिमीलाई चुनिहाल्यो ।[2]

وَاِذْ قَالَتِ الْمَلٰٓئِكَةُ يٰمَرْيَمُ اِنَّ اللّٰهَ اصْطَفٰىكِ وَطَهَّرَكِ وَاصْطَفٰىكِ عَلٰى نِسَآءِ الْعٰلَمِيْنَ ﴿۴۲﴾

(४३) हे मरियम ! तिमी आफ्ना पोषकका आदेशहरूको पालन र दण्डवत् (सजदा) गरिराख

يٰمَرْيَمُ اقْنُتِيْ لِرَبِّكِ وَاسْجُدِيْ

[1]बृद्धा अवस्थामा चमत्कारी रूपले पुत्र जन्म लिने शुभ-सूचना सुनेर उनको उत्सुकतामा बृद्धिका कारण लक्षणबारे ज्ञान गर्न चाहे । अल्लाह तआलाको आदेश भयो कि तीन दिनको लागि तिम्रो आवाज बन्द हुनेछ जुन मेरो तर्फबाट लक्षण हुनेछ । परन्तु तिमी यस मौनताको स्थितिमा अधिकभन्दा अधिक बिहान र साँझ अल्लाहको महिमागान् गर, ताकि त्यो बरदान जुन तिमीलाई आफ्नो प्रभुबाट प्राप्त हुनेभएको छ, त्यसको कृतज्ञता ब्यक्त गर्न सक । यसको अर्थ यो भयो कि अल्लाह तआला तिम्रो आवश्यकता अनुसार कुरा प्रदान गर्दछ भने, उसको कृतज्ञता व्यक्त गरिराख ।

[2]आदरणीय मरयमको यो सम्मान र मान र उनको आफ्नो विशेषता र उनको युगको दृष्टिकोणले छ किनभने हदीसहरुमा आदरणीय मरयमका साथ आदरणीय ख़दीजालाई पनि خير نسائها (सबै स्त्रीहरुमा श्रेष्ठ) भनिएको छ। र केही हदीसहरुमा चार स्त्रीहरुलाई पूर्ण भनिएको छ । आदरणीय मरियम, आदरणीय आसिया (फिर्औनकी पत्नी), आदरणीय ख़दीजा तथा आदरणीय आयशा । आदरणीय आयशाको बारेमा भनिएको छ कि उनको श्रेष्ठता स्त्रहिरुमा त्यस्तो नै छ, जस्तो सरीद (हलुवा अथवा खीर) को सबै खानाहरुमा श्रेष्ठता छ । (इब्ने कसीर) र तिर्मिजीमा आदरणीय फातिमा पुत्री मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई पनि श्रेष्ठ स्त्रीहरुमा सम्मिलित गरिएको छ। (इब्ने कसीर) यसको यो पनि अर्थ हुनसक्छ कि उपरोक्त वर्णित स्त्रीहरुलाई अन्य स्त्रीहरुमा श्रेष्ठता तथा महानता प्रदान गरिएको छ कि उनीहरु आ-आफ्ना युगमा श्रेष्ठता राख्दछन् ।

وَارْكَعِي مَعَ الرّٰكِعِينَ ۝٤٣

र झुक्नेहरू (रूकुअ गर्नेहरु) सँग नतमस्तक हुने गर ।

ذٰلِكَ مِنْ اَنْۢبَآءِ الْغَيْبِ نُوْحِيْهِ اِلَيْكَ ؕ وَمَا كُنْتَ لَدَيْهِمْ اِذْ يُلْقُوْنَ اَقْلَامَهُمْ اَيُّهُمْ يَكْفُلُ مَرْيَمَ ۪ وَمَا كُنْتَ لَدَيْهِمْ اِذْ يَخْتَصِمُوْنَ ۝٤٤

(४४) यो परोक्षका सूचनाहरु मध्ये हो, जसलाई हामी तपाईंलाई उपदेश गरिराखेका छौं, तपाईं त त्यसबेला उनीहरूको पासमा हुनुहुन्थ्यो, जब उनी आफ्ना कलम फ्याँकिराखेका थिए कि उनीहरूमध्ये मरियमको पालन-पोषण कसले गर्नेछ ? र न तपाईं उनीहरूको झगडाको समय उनको पासमा हुनुहुन्थ्यो ।[1]

اِذْ قَالَتِ الْمَلٰٓئِكَةُ يٰمَرْيَمُ اِنَّ اللّٰهَ يُبَشِّرُكِ بِكَلِمَةٍ مِّنْهُ ۖ اسْمُهُ الْمَسِيْحُ عِيْسَى ابْنُ مَرْيَمَ

(४५) र (स्मरण गर) जब फरिश्ताहरूले भने, हे मरियम ! तिमीलाई अल्लाह (तआला) आफ्ना एक शब्द[2] को शुभ-सूचना दिन्छ कि जसको नाम मसीह[3]

---

[1]आजकल अहले बिदअतले (बिदअत गर्नेहरू) नबी करीम सल्लल्लाहु अलैहि वसल्लमलाई मान-मर्यादामा अतिश्योक्ति गर्दै, उनलाई अल्लाह तआला समान परोक्षको ज्ञानी र सर्वव्यापी मान्ने विश्वास मनगढन्ते रुपले रचिहालेका छन् । यस आयतमा यी दुबै कुराहरूको स्पष्ट खण्डन भइराखेको छ। यदि उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई परोक्षको ज्ञान भएको भए अल्लाह तआला यो आदेश गर्दैनथ्यो कि हामीले परोक्षका सूचनाहरू तपाईंलाई दिइराखेका छौं किनभने जसलाई अघिदेखिनै यो ज्ञान हुन्छ, उससित यस्तो भनिंदैन, र यसैप्रकार सर्वब्यापी हुन्छ, उससित यो भनिंदैन कि तपाईं त्यसबेला त्यहाँ हुनुहुन्नथ्यो । मानिसहरू नाम लाटरी (चिठ्ठा) जस्तै निकालिराखेका थिए । लाटरीबाट नाम निकाल्नुको आवश्यकता यसकारण झन पर्‍यो कि आदरणीय मरयमकै संरक्षक बन्न केही अन्य मानिसहरू पनि इच्छुक थिए । ﴿ ذٰلِكَ مِنْ اَنْۢبَآءِ الْغَيْبِ نُوْحِيْهِ اِلَيْكَ ﴾ बाट नबी करीम सल्लल्लाहु अलैहि वसल्लमको रिसालत (ईशदूतत्व) तथा सत्यता प्रमाणित गर्नु पनि छ । किनभने ईशवाणी (वह्यी) मात्र पैगम्बरमाथि आउँछ, कुनै अन्य व्यक्तिलाई आउँदैन ।

[2]आदरणीय ईसालाई कलमा अर्थात अल्लाहको कलमा यसकारण भनिएको छ कि उनको जन्म एक चमत्कारीरूपले सामान्य मानव जन्म विधिको प्रतिकूल बिना पिता अल्लाहको विशेष सामर्थ्य र उसको कथन كُنْ (भइहाल) को उत्पत्ति हो ।

[3]मसीह, "मसह" धातुले बनेको हो र مَسَحَ الأَرْض को अर्थ धर्तीमा अधिक भ्रमणकर्ता हो अथवा यसको अर्थ हात घुमाउनेवाला हो, किनभने तपाईं हात घुमाएर स्पर्श (गरेर) रोगीहरूलाई अल्लाहको आज्ञाले स्वस्थ गरिदिनु हुन्थ्यो । तथा प्रलयको (समीप) प्रकट हुनेवाला दज्जाललाई मसीह यसकारण भनिन्छ कि उसको एउटा आँखा कानो हुनेछ अथवा त्यो पनि जगतमा अधिक

وَجِيْهًا فِى الدُّنْيَا وَالْاٰخِرَةِ وَمِنَ الْمُقَرَّبِيْنَ ﴿٤٥﴾

पुत्र मरियम हुनेछ । जो संसार र परलोकमा सम्मानित हुनेछ । र त्यो मेरो निकटवर्तीमध्ये छ ।

وَيُكَلِّمُ النَّاسَ فِى الْمَهْدِ وَكَهْلًا وَّمِنَ الصّٰلِحِيْنَ ﴿٤٦﴾

(४६) त्यो मानिसहरूसित पींडमा (बच्चामा) पनि कुरा गर्नेछ र अर्धबैंसमा ठूलो आयुमा पनि ।[१] र त्यो सदाचारीहरूमध्ये हुनेछ ।

قَالَتْ رَبِّ اَنّٰى يَكُوْنُ لِىْ وَلَدٌ وَّلَمْ يَمْسَسْنِىْ بَشَرٌ ۭ قَالَ كَذٰلِكِ اللّٰهُ يَخْلُقُ مَا يَشَاۗءُ ۭ اِذَا قَضٰٓى

(४७) तिनी भनिन्, "प्रभु ! मलाई पुत्र कसरी हुनेछ ? जबकि मलाई कुनै पुरूषले स्पर्श पनि गरेको छैन ।" फरिश्ताले भन्यो यस्तै अल्लाह

भ्रमण गर्नेछ तथा मक्का-मदीना एवं बैतुल मोकद्दसका अतिरिक्त संसारको प्रत्येक स्थानमा जानेछ । यसकारण उसलाई मसीह दज्जाल भनिन्छ । (फ़तहुल क़दीर) सामान्य व्याख्याकारहरूले सामान्यत: यही कुरा लेखेका छन् । केही अन्य शोधकर्ताहरू अनुसार मसीह यहूदी तथा इसाईहरूका विचारले पैग़म्बरलाई भन्दछन् अर्थात् उनको यो परिभाषा प्रथम युगका पैग़म्बरहरूका लागि प्रयोग भएको हो । दज्जाललाई मसीह यसकारण भनिएको छ किनभने यहूदीहरूलाई जुन अन्तिम क्रान्तिकारी मसीहको शुभ सूचना दिइएको छ र जसको प्रतीक्षा अनुचित रूपले अहिले पनि गरिराखेका छन्, त्यो दज्जाल यसै मसीहको नाममा आउने छ अर्थात् आफूलाई त्यही मसीह सिद्ध गर्नेछ । परन्तु त्यो यस दाबीका अतिरिक्त अन्य दाबीहरूमा धोका-धडीको यति ठूलो नमूना हुनेछ कि आदि देखि अन्तसम्म त्यसको कुनै तुलना पाइने छैन । यसकारण दज्जाल भनिनेछ । ईसा अजमी भाषाको शब्द हो । केही विद्वानहरूका निकट यो अरबी र عاس र يعوس को विकृत रूप हो । जसको अर्थ राजनीतिक नेतृत्व हुन्छ । (क़ुर्तुबी तथा फ़तहुल क़दीर)

[१]आदरणीय ईसाको (पींड) आमाको काखमा कुराकानी गर्नेको वर्णन स्वयं क़ुरआन करीमको सूर: मरियममा छ । यसका अतिरिक्त सहीह हदीसमा दुई अन्य बच्चाहरूको आमाको काखीमा कुरा गर्नुको वर्णन छ । एक साहब जुरैज र अर्को इस्राईली स्त्रीको बच्चा । (सहीह बुख़ारी, किताबूल अम्बिया, बाबु मरियम)

अर्धबैंसमा कुरा गर्नुको अभिप्राय केही ज्ञानीहरूले यो लिएका छन् कि जब ठूलो भई प्रकाशना एवं दूतत्वबाट सुशोभित गरिनेछन्, तथा केहीले भनेका छन् कि उहाँ प्रलयका निकट जब आकाशबाट ओर्लनु हुन्छ, जस्तो कि अहले सुन्नतको विश्वास छ, जुन सही निरन्तर हदीसहरूबाट तर्कसंगत छ त त्यसबेला जुन इस्लामको प्रचार गर्नुहुनेछ ती कुराहरूसित अभिप्राय छ । (तफ़सीर इब्ने कसीर तथा क़ुर्तुबी)

أَمْرًا فَإِنَّمَا يَقُولُ لَهُ كُن فَيَكُونُ ﴿٤٧﴾

(तआ़ला) जे चाहन्छ, उत्पन्न गर्दछ । जतिखेर पनि त्यो कुनै कार्य गर्न चाहन्छ भने केवल भन्दछ "भइहाल", त त्यो भइहाल्छ ।"[1]

وَيُعَلِّمُهُ الْكِتَابَ وَالْحِكْمَةَ وَالتَّوْرَاةَ وَالْإِنجِيلَ ﴿٤٨﴾

(४८) र अल्लाह (तआ़ला) ले त्यसलाई लेख्न[2] र बुद्धिमत्ता तथा तौरात एवं इंजील सिकाउने छ ।

وَرَسُولًا إِلَىٰ بَنِي إِسْرَائِيلَ أَنِّي قَدْ جِئْتُكُم بِآيَةٍ مِّن رَّبِّكُمْ ۖ أَنِّي أَخْلُقُ لَكُم مِّنَ الطِّينِ كَهَيْئَةِ الطَّيْرِ فَأَنفُخُ فِيهِ فَيَكُونُ طَيْرًا بِإِذْنِ اللَّهِ ۖ وَأُبْرِئُ الْأَكْمَهَ وَالْأَبْرَصَ وَأُحْيِي الْمَوْتَىٰ بِإِذْنِ اللَّهِ ۖ وَأُنَبِّئُكُم بِمَا تَأْكُلُونَ وَمَا تَدَّخِرُونَ فِي بُيُوتِكُمْ ۚ

(४९) र त्यो इस्राईलको सन्तानको रसूल हुनेछ, त्यसले भन्ने छ कि म तिम्रो पासमा तिम्रा प्रभुको निशानी (लक्षण) ल्याएको छु, म तिम्रो लागि माटोबाट पंक्षीको रुप जस्तै आकृति बनाउँछु ।[3] अनि त्यसमा फुक्छु, त त्यो अल्लाह (तआ़ला) को आदेशले पंक्षी बन्दछ र म अल्लाहको आदेशले जन्मेदेखि अन्धोलाई र कोरीलाई स्वस्थ पारिदिन्छु र म अल्लाहको आदेशले मृतकलाई जीवित पारिदिन्छु[4] र जे-जति तिमी खान्छौ र जे-जति पनि



[1]तिमी आश्चर्य चकित हुनु उचित छ, तर अल्लाह तआ़लाको सामर्थ्यको लागि यो कुनै कठिन कार्य होइन । त्यो त जतिखेर चाहेको खण्डमा स्वभाविक एवं प्रत्यक्ष साधन समाप्त गरी, मात्र كُنْ (कुन) आदेशबाट एकछिनमै गर्नसक्छ ।

[2]किताब (लेख) सित तात्पर्य किताबत (लेख्नु) हो, जस्तो कि अनुवादमा लिइएको छ अथवा इंजील एवं तौरातको अतिरिक्त अरु कुनै किताब छ, जसको ज्ञान अल्लाह तआ़लाले उनलाई दियो ।

[3]أخلق لكم أى أصور و أقدر لكم (कुर्तुबी) यहाँ उत्पत्तिको अर्थ पैदा गर्नु होइन यसमा त सामर्थ्य मात्र अल्लाहलाई छ किनभने त्यही रचयिता हो । यहाँ यसको अर्थ वाह्य रूपरेखा बनाउनु हो ।

[4]पुनः अल्लाहको आदेशबाट भन्नाले यही अर्थ छ कि कुनै व्यक्ति यो ठानोस् कि म स्रष्टाको विशेषता एवं गुणहरूलाई प्राप्त गरिसकेको छु । कदापि यस्तो छैन, म त उसको भक्त र रसूल हूँ । यो जे-जति मेरो हातबाट भइराखेको छ, चमत्कार (मोजिज़ा) हो, जुन मात्र अल्लाहकै आदेशबाट भइराखेको छ ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً لَّكُمْ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٤٩﴾

तिमी आफ्ना घरहरूमा एकत्रित गर्दछौं, म तिमीलाई भनिदिन्छु कि यसमा तिम्रो लागि ठूलो निशानी (लक्षण) छ यदि तिमी बुझ्दछौ भने ।

وَمُصَدِّقًا لِّمَا بَيْنَ يَدَيَّ مِنَ التَّوْرَاةِ وَلِأُحِلَّ لَكُم بَعْضَ الَّذِي حُرِّمَ عَلَيْكُمْ وَجِئْتُكُم بِآيَةٍ مِّن رَّبِّكُمْ فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿٥٠﴾

(५०) र म तौरातको पुष्टि गर्दछु, जुन मेरो समक्ष छ र म यसकारण आएको हूँ कि तिम्रो निम्ति केही त्यसता कुराहरूलाई हलाल (वैध) गरुँ, जुन तिम्रालागि हराम (अवैध) गरिएका छन् ।[1] र म तिम्रो पासमा तिम्रो प्रभुको निशानी ल्याएको छु, यसकारण तिमी अल्लाह (तआ़ला) सित तर्स र मेरै अनुकरण गर ।

इमाम इब्ने क़सीर भन्नुहुन्छ कि अल्लाह तआ़लाले प्रत्येक नबीलाई त्यसको समय र परिस्थितिहरू अनुसार मोजेज़ाहरु प्रदान गर्‍यो ताकि त्यसको सत्यता एवं श्रेष्ठता स्पष्ट हुन सकोस् । आदरणीय मूसाको समयमा जादूको निकै प्रचलन थियो, उनलाई यस्ता मोजे़जा प्रदान गरिए, जसका अगाडि ठूला-ठूला जादूगर आफ्ना कार्यक्रम देखाउन असफल रहे, जसबाट उनीहरूमाथि आदरणीय मूसाको सत्यता स्पष्ट भयो र उनीहरू निष्ठावान (विश्वास गर्नेथाले) । आदरणीय ईसा अलैहिस्सलामको समयमा औषधि र चिकित्साको अधिक प्रचार भइराखेको थियो, अत: उनलाई मृतकलाई जीवित, जन्मजात अन्धा र कोरीहहरूलाई स्वस्थ गरिदिने मोजेजा (चमत्कार) प्रदान गरियो, जुन कुनै पनि ठूलो भन्दा ठूलो चिकित्सक आफ्नो कलाद्वारा गर्न शक्ति राख्दैन्थ्यो । हाम्रो पैग़म्बर नबी करीम सल्लल्लाहु अलैहि वसल्लमको समयमा कविता एवं साहित्य तथा भाषा र भाषणको ठूलो प्रचार थियो, अत: उनलाई कुर्आन जस्तो भाषा-भाष्य र सर्वश्रेष्ठ साहित्य प्रदान गरियो जसको तुलना संसारभरिका साहित्यकार, एवं कविहरु आजसम्म प्रस्तुत गर्न सकेनन् र चुनौती दिंदा पनि प्रस्तुत गर्न सकेनन् र केयामत (प्रलय) सम्म प्रस्तुत गर्न सक्ने छैनन् ।

[1]यसबाट तात्पर्य या त ती कुराहरू हुन्, जुन अल्लाह तआ़लाले दण्डस्वरुप उनीहरूका लागि निषेध (हराम) गरिदिएको थियो अथवा ती कुराहरू जुन उनका धर्म-ज्ञानीहरू (आलिमहरू) ले स्वयं आफूमाथि निषेध गरेका थिए, अल्लाहको आदेश थिएन । (कुर्तबी) अथवा यस्ता कुरा पनि हुन सक्छन्, जुन उनका धर्म-ज्ञानीहरूले आफ्ना सोच-विचारले वर्जित गरेका थिए । र सोच-विचारमा उनीहरूबाट त्रुटि भयो र आदरणीय ईसाले यी त्रुटिहरूलाई समाप्त गरी उनलाई हलाल (ग्रहणीय) गरिदिनु भयो । (इब्ने क़सीर)

إِنَّ اللَّهَ رَبِّي وَرَبُّكُمْ فَاعْبُدُوهُ ۗ هَٰذَا صِرَاطٌ مُّسْتَقِيمٌ ﴿٥١﴾

(५१) विश्वास गर ! मेरो र तिम्रो स्वामी अल्लाह नै हो, तिमी सबै उसैको आराधना गर । यही सोझो मार्ग हो ।[1]

فَلَمَّا أَحَسَّ عِيسَىٰ مِنْهُمُ الْكُفْرَ قَالَ مَنْ أَنصَارِي إِلَى اللَّهِ ۖ قَالَ الْحَوَارِيُّونَ نَحْنُ أَنصَارُ اللَّهِ آمَنَّا بِاللَّهِ وَاشْهَدْ بِأَنَّا مُسْلِمُونَ ﴿٥٢﴾

(५२) परन्तु जब (आदरणीय) ईसा (अलैहिस्सलाम) लाई उनको इन्कारको आभास भयो,[2] तब भने कि अल्लाह (तआला) को मार्गमा मेरो सहायता गर्नेहरू को-को छन् ।[3] हवारीहरूले उत्तर दिए कि हामी अल्लाह (तआला) को मार्गमा सहायक छौं ।[4]

---

[1]अर्थात् अल्लाहको आराधना (इबादत) गर्नुमा र त्यसको अगाडि तुक्षता एवं विनती गर्नुमा म र तिमी दुबै बराबर छौं । यसकारण सोझो मार्ग यो हो कि एक अल्लाहको इबादत (अर्चना) गरियोस् र त्यसको प्रभुत्वमा कसैलाई पनि सम्मिलित नगरियोस् ।

[2]अर्थात् यस्ता चाल र योजनाहरू एवं सशंकित कार्य जुन कुफ्र अर्थात आदरणीय मसीहको रिसालतको ईन्कारको द्यौतक थियो ।

[3]धेरैजसो नबीहरूले आफ्ना कौमका मानिसहरूसित दिक्दार भई वाहय साधन स्वरुप आफ्ना कौमका शिष्ट व्यक्तिहरूबाट सहायता मागेका छन् । जस्तो कि स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लमले प्रारम्भिक कालमा, जब कुरैश उहाँको आमन्त्रण कार्यमा बाधा पुऱ्याइराखेका थिए, तब उहाँ हजको समयमा मानिसहरूलाई आफ्नो साथी तथा सहायक बनाउन प्रयत्न गर्नु हुन्थ्यो, ताकि उहाँ सल्लल्लाहु अलैहि वसल्लम प्रभुका आदेश मानिसहरूसम्म पुऱ्याउन सकून्, जसमा अन्सारले अधिसरी साथ दिए र उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई उनीहरूले हिज्रतभन्दा पूर्व तथा हिज्रत पछि सहायता गरे । यसैप्रकार यहाँ आदरणीय ईसाले सहायता माँगे । यो त्यस प्रकारको सहायता थिएन, जुन मनुष्यको शक्तिभन्दा माथि होस्, किनभने यो शिर्क हो । र प्रत्येक नबी शिर्क उन्मूलन (जरैदेखि उखेलेर फाल्न) लाई नै आउँदै गरेका छन्, अनि उनी स्वयं कसरी शिर्क गर्नसक्थे ? परन्तु समाधि पूजकहरूको अन्तःकरणको अन्धोपनामाथि खेद प्रकट गर्नुपर्छ कि उनीहरू मृत मानिसहरूसित सहायता माँग्ने कुराको औचित्य देखाउनलाई आदरणीय ईसाको कथन ﴿مَنْ أَنصَارِي إِلَى اللَّهِ﴾ बाट तर्क निकाल्छन् ? अल्लाह तआलाले उनीहरूलाई मार्गदर्शन प्रदान गरोस् ।

[4]हवारीयुन, हवारीको बहुवचन हो, जसको अर्थ أنصار (अन्सार) सहायक । जुन प्रकार नबी सल्लल्लाहु अलैहि वसल्लमको कथन छ ।

हामी अल्लाह (तआ़ला) मा ईमान राख्दछौं (अल्लाहप्रति निष्ठावान भयौं) र तपाईं साक्षी रहनुस् कि हामी मुसलमान हौं ।

رَبَّنَآ اٰمَنَّا بِمَآ اَنۡزَلۡتَ وَاتَّبَعۡنَا الرَّسُوۡلَ فَاكۡتُبۡنَا مَعَ الشّٰهِدِيۡنَ ۝٥٣

(५३) हे हाम्रा पालनकर्ता ! हामीले तिमीले अवतरित गरेको वह्यी (ईशवाणी) मा निष्ठावान भयौं र हामीले तिम्रो रसूलको अनुसरण स्वीकार गर्‍यौं । तसर्थ अब तिमी हामीलाई साक्षीहरूमा लेख ।

وَمَكَرُوۡا وَمَكَرَ اللّٰهُ ؕ وَاللّٰهُ خَيۡرُ الۡمٰكِرِيۡنَ ۝٥٤

(५४) र काफ़िरहरूले चाल चले र अल्लाह (तआ़ला) ले पनि योजना बनायो र अल्लाह (तआ़ला) सबै योजनाकारहरूभन्दा श्रेष्ठ छ ।[1]

اِذۡ قَالَ اللّٰهُ يٰعِيۡسٰٓى اِنِّىۡ مُتَوَفِّيۡكَ وَرَافِعُكَ اِلَىَّ وَمُطَهِّرُكَ

(५५) जब अल्लाह (तआ़ला) ले भन्यो, हे ईसा ! म तिमीलाई पूर्णरूपले लिनेछु ।[2]

---

(إِنَّ لِكُلِّ نَبِيٍّ حَوَارِيًّا وَحَوَارِيَّ الزُّبَيْرُ) "प्रत्येक नबीको कोही विशेष सहायक हुन्छ र मेरो सहायक ज़ुबैर हो ।" (सहीह बुख़ारी)

[1]आदरणीय ईसाको समयमा सीरियाको क्षेत्र रूमिहरुको अधीन थियो, यहाँ उनीहरूद्वारा जुन अधिकारी पदासीन थियो, त्यो काफ़िर थियो, यहूदीहरूले आदरणीय ईसाका विरूद्ध त्यस अधिकारीलाई उक्साए कि यो वर्ण शंकर نعوذ بالله र विद्रोही छ आदि-आदि । अधिकारीले उनीहरूका माग अनुसार उनलाई फाँसीमा झुण्ड्याउने निर्णय गर्‍यो । तर अल्लाहले आदरणीय ईसालाई सुरक्षित आकाशमा उठायो र उनको समरूप एक मानिसलाई उनीहरूले फाँसी दिए र ठान्दै गरे कि हामीले ईसालाई फाँसी दिएका हौं

مكر (मक्र) अरबी भाषामा सूक्ष्म तथा गुप्त उपायलाई भन्दछन् । तथा यसै अर्थमा यहाँ अल्लाहलाई خير الماكرين भनिएको छ, मानो यो उपाय नराम्रो पनि हुनसक्छ तथा राम्रो पनि । यदि नराम्रो प्रायोजनका लागि छ भने नराम्रो, राम्रो प्रयोजनका लागि छ भने राम्रो छ

[2]المتوفى यो توفى बाट बनेको हो जसको धातु وفى हो यसको मूल अर्थ सम्पूर्ण रूपले लिनु हो, मानिसको मृत्यु पश्चात,"वफात" शब्द यसकारण भनिन्छ कि त्यसका शारीरिक अधिकार पूर्णत: खोसिएका हुन्छन् । अत: यस शब्दार्थका विभिन्न रूपहरु मध्येबाट मृत्यु मात्र एक रूप हो । निद्रामा पनि सामयिक रूपले मानवीय अधिकार निलम्बित गरिएका हुन्छन्, यसकारण निद्राको लागि पनि पवित्र क़ुरआनले 'वफात' शब्द प्रयोग गरेको छ । जसबाट विदित भयो कि यसको मूल अर्थ पूर्णरूपसित लिनु नै हो । إِنِّي متوفيك मा यहाँ

مِنَ الَّذِينَ كَفَرُوا وَجَاعِلُ الَّذِينَ اتَّبَعُوكَ فَوْقَ الَّذِينَ كَفَرُوا إِلَىٰ يَوْمِ الْقِيَامَةِ ثُمَّ إِلَيَّ مَرْجِعُكُمْ فَأَحْكُمُ بَيْنَكُمْ فِيمَا كُنتُمْ فِيهِ تَخْتَلِفُونَ ﴿٥٥﴾

तथा तिमीलाई आफूतिर उठाउने छु र तिमीलाई अस्वीकार गर्नेहरूबाट पवित्र गर्नेछु ।[1] र तिम्रा अनुयायीहरूलाई काफिरहरूभन्दा केयामतका दिनसम्म माथि राख्नेछु ।[2] अनि तिमी सबैलाई मतिरै फर्कनु छ, म नै तिमीहरु बीच सबै मत्भेदको निर्णय गर्नेछु ।

فَأَمَّا الَّذِينَ كَفَرُوا فَأُعَذِّبُهُمْ عَذَابًا شَدِيدًا فِي الدُّنْيَا وَالْآخِرَةِ وَمَا لَهُم مِّن نَّاصِرِينَ ﴿٥٦﴾

(५६) अनि काफिरहरूलाई त म यस लोक तथा परलोकमा कडा यातनाहरू दिनेछु । र उनीहरूको कोही सहायक हुने छैन ।

وَأَمَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فَيُوَفِّيهِمْ أُجُورَهُمْ ۗ وَاللَّهُ لَا يُحِبُّ الظَّالِمِينَ ﴿٥٧﴾

(५७) तर ईमान भएका र सत्कर्म गर्नेहरूलाई अल्लाह (तआला) उनीहरूको पूरा-पूरा प्रत्युपकार दिनेछ र अल्लाह तआला अत्याचारीहरूलाई प्रेम गर्दैन ।

ذَٰلِكَ نَتْلُوهُ عَلَيْكَ مِنَ الْآيَاتِ وَالذِّكْرِ الْحَكِيمِ ﴿٥٨﴾

(५८) यो जुन हामी तिम्रो समक्ष पढिराखेका छौं, आयतहरू हुन् र दृढ उपदेश हुन् ।

---

आफ्नो मूल अर्थमा प्रयोग भएको छ । अर्थात् हे ईसा ! म तिमीलाई यहूदी र इसाईहरूबाट बचाएर पूर्णत: आफूतिर उठाउनेछु । तथा यस्तै नै भयो । केही धर्म ज्ञानीहरूले अवास्तविक अर्थ मृत्यु लिएका छन् जुन साधारणत: प्रयोगमा आउँछ तर यस वाक्यमा رافعك को पहिला तथा متوفيك को अर्थ पछि लिइएको छ अर्थात् प्रथम तिमीलाई आकाशमा उठाउनेछु तथा पुन: संसारमा उत्रे पश्चात मृत्यु दिनेछु अर्थात् यहूदीहरूको हातबाट तिम्रो हत्या हुने छैन तिम्रो स्वभाविक मृत्यु नै हुनेछ ।

[1]यसबाट तात्पर्य ती आक्षेपबाट शुद्धता अथवा पवित्रता छ, जसबाट तपाईंलाई यहूदी कलंकित गर्दथे । नबी सल्लल्लाहु अलैहि वसल्लमद्वारा उहाँको सफाइ संसार समक्ष प्रस्तुत गरियो ।

[2]यसबाट तात्पर्य या त इसाईहरूको सांसारिक विजय यहूदीहरूमाथि छ, जो प्रलयसम्म रहने छ, यद्यपि कि उनीहरू आफ्ना गलत विश्वासका कारण अन्तिम मोक्ष प्राप्त गर्न असफल नै रहनेछन् अथवा मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमका अनुयायीहरूको विजय हो ।

إِنَّ مَثَلَ عِيسَىٰ عِندَ اللَّهِ كَمَثَلِ آدَمَ خَلَقَهُ مِن تُرَابٍ ثُمَّ قَالَ لَهُ كُن فَيَكُونُ ﴿٥٩﴾

(५९) अल्लाह (तआला) का निकट ईसाको दशा यथावत आदमका समान छ, जसलाई माटोबाट पैदा गरी भन्यो कि भईहाल अनि त्यो भइ हाल्यो ।

الْحَقُّ مِن رَّبِّكَ فَلَا تَكُن مِّنَ الْمُمْتَرِينَ ﴿٦٠﴾

(६०) तिम्रो प्रभुको तर्फबाट सत्य यही हो, सावधान ! शंका गर्नेहरूमध्ये नहुनु ।

فَمَنْ حَاجَّكَ فِيهِ مِن بَعْدِ مَا جَاءَكَ مِنَ الْعِلْمِ فَقُلْ تَعَالَوْا نَدْعُ أَبْنَاءَنَا وَأَبْنَاءَكُمْ وَنِسَاءَنَا وَنِسَاءَكُمْ وَأَنفُسَنَا وَأَنفُسَكُمْ ثُمَّ نَبْتَهِلْ فَنَجْعَل لَّعْنَتَ اللَّهِ عَلَى الْكَاذِبِينَ ﴿٦١﴾

(६१) यसकारण जसले तपाईं छेउ यो ज्ञान आइसके पश्चात पनि तपाईंसित यसमा झगडा गर्दछ, त तपाईं भनिदिनुस् कि आउ हामी, तिमी आफ्ना छोराहरूलाई र हामी तिमी आफ्ना स्त्रीहरूलाई बोलाऔं र हामी तथा तिमी स्वयं आफू पनि आऔं अनि बिलीन भएर प्रार्थना गरौं । र झूठाहरूमाथि अल्लाहको धिक्कार पठाऔं ।[1]

[1]यसलाई मोबाहलाको आयत भनिन्छ, मोबाहलाको अर्थ हो दुई पक्षको एक-अर्कामाथि धिक्कार अर्थात श्राप दिनु, तात्पर्य यो हो कि जब दुई पक्षहरूबीच कुनै विषयमा विवाद तथा विभेद हुन्छ एवं तर्क-वितर्कबाट त्यसको टुङ्गो लाग्दैन, त दुवै अल्लाहसित प्रार्थना गरून् कि हामीमा जो मित्थ्यावादी छ, त्यसमाथि धिक्कार गर । यसको संक्षिप्त भूमिका यो हो कि इसाईहरूको एउटा प्रतिनिधि मंडल नबी सललाहुअलैहि वसल्लमको सेवामा उपस्थित भयो तथा आदरणीय ईसाको सन्दर्भमा ती जो अतियुक्ति मिश्रित आस्थाहरू राख्दथे त्यसमाथि वाद-विवाद गर्नथाले । अन्ततः यो आयत उत्र्यो तथा उहाँले उनीहरूलाई मोबाहलालाई आमन्त्रित गर्नुभयो । आदरणीय अली व फ़ातिमा तथा हसन तथा हुसैनलाई पनि साथमा लिनुभयो तथा इसाईहरूसित भन्नुभयो कि तिमी पनि आफ्ना परिवारलाई बोलाउ अनि हामी मिलेर झूठामाथि धिक्कारको प्रार्थना गरौं, इसाई परस्पर परामर्श पश्चात यसको लागि तयार भएनन् तथा यो प्रस्ताव राखे कि उहाँ जे चाहनुहुन्छ हामी दिन तयार छौं । उहाँले उनीहरूमाथि सुरक्षाकर (जिज़या) निर्धारित गरिदिनुभयो जसलाई लिनका लागि उहाँले अबू उबैदा बिन जर्राहलाई जसलाई उहाँले "अमीने उम्मत" को उपाधिबाट अलंकृत गर्नुभएको थियो, उनीहरूको साथ पठाउनु भयो । (तफ़सीर इब्ने कसीर तथा फ़तहुल क़दीर आदिबाट संक्षिप्त) आगामी आयतमा अहले किताब (यहूदी र इसाईहरू) लाई एकेश्वरवादतिर बोलाइँदैछ ।

إِنَّ هَٰذَا لَهُوَ الْقَصَصُ الْحَقُّ ۚ وَمَا مِنْ إِلَٰهٍ إِلَّا اللَّهُ ۚ وَإِنَّ اللَّهَ لَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٦٢﴾

(६२) निःसन्देह केवल यही सत्य वर्णन हो र अल्लाह (तआ़ला) का अतिरिक्त कोही अन्य पूजा योग्य छैन, र निःसन्देह अल्लाह नै प्रभुत्वशाली तथा तत्वदर्शी छ ।

فَإِن تَوَلَّوْا فَإِنَّ اللَّهَ عَلِيمٌ بِالْمُفْسِدِينَ ﴿٦٣﴾

(६३) तैपनि यदि उनीहरू स्वीकार गर्दैनन्, त अल्लाह (तआ़ला) पनि विद्रोहीहरूलाई राम्ररी जान्दछ ।

قُلْ يَا أَهْلَ الْكِتَابِ تَعَالَوْا إِلَىٰ كَلِمَةٍ سَوَاءٍ بَيْنَنَا وَبَيْنَكُمْ أَلَّا نَعْبُدَ إِلَّا اللَّهَ وَلَا نُشْرِكَ بِهِ شَيْئًا وَلَا يَتَّخِذَ بَعْضُنَا بَعْضًا أَرْبَابًا مِّن دُونِ اللَّهِ ۚ فَإِن تَوَلَّوْا فَقُولُوا اشْهَدُوا بِأَنَّا مُسْلِمُونَ ﴿٦٤﴾

(६४) तपाईं भनिदिनुस् कि हे किताब प्रदान गरिएका ! यस्ता न्यायपूर्ण कुरातिर आऊ जुन हामी र तिमीमा समान छ कि हामी अल्लाह (तआ़ला) का अतिरिक्त कसैको बन्दना (इबादत) नगरौं र न त्यससँग कसैलाई सम्मिलित गरौं ।[1] न अल्लाह (तआ़ला) लाई छाडि आपसमा एक-अर्कालाई स्वामी नै बनाऊ ।[2] यदि उनीहरू विमुख हुन्छन् त भनिदेउ कि साक्षी रहनु कि हामी त मुसलमान हौं ।[3]

---

[1]कुनै मूर्तिलाई न कुनै क्रूसलाई, न अग्निलाई र कुनै अन्य वस्तुलाई, बरु मात्र एक अल्लाहको इबादत गरौं, जस्तो कि सबै नबीहरूले आमन्त्रण गरे ।

[2]यो एक त त्यस कुरातिर संकेत छ कि तिमीले आदरणीय मसीह र आदरणीय उज़ैरको आराध्य हुने (प्रभु हुनु) को जुन विश्वास रचेका छौ यो गलत हो । उनीहरू प्रभु होइनन्, उनीहरू मनुष्य नै हुन्, दोस्रो यसतिर संकेत छ कि तिमीले आफ्ना विद्वान धर्मात्माहरूलाई उचित-अनुचित गर्ने कुराको अधिकार दिइसकेका छौ, यो पनि उनलाई प्रभु बनाउनु हो, जस्तो कि आयत إتخذوا أحبارهم यसमा साक्षी छ, यो पनि उचित छैन, हलाल र हराम (वैध-अवैध) गर्नुको अधिकार पनि केवल अल्लाहलाई नै छ । (इब्ने क़सीर एवं फ़तहुल क़दीर)

[3]सहीह बुख़ारीमा छ कि क़ुरआ़न करीमको यस आदेशानुसार उहाँ सल्लल्लाहु अलैहि वसल्लमले हिरक़्ल राजाधिराज रोमलाई पत्र पठाउनु भयो, त्यसमा यस आयतको सन्दर्भले इस्लाम धर्म स्वीकार गर्न आमन्त्रण दिनुभयो र उसित भन्नुभयो कि यदि तिमी मुसलमान हुन्छौ भने दुईगुना पुण्य पाउनेछौ, अन्यथा तिम्रो सम्पूर्ण प्रजाको पनि पाप तिम्रै टाउकोमा हुनेछ ।

يَٰٓأَهۡلَ ٱلۡكِتَٰبِ لِمَ تُحَآجُّونَ فِيٓ إِبۡرَٰهِيمَ وَمَآ أُنزِلَتِ ٱلتَّوۡرَىٰةُ وَٱلۡإِنجِيلُ إِلَّا مِنۢ بَعۡدِهِۦٓۚ أَفَلَا تَعۡقِلُونَ ٦٥

(६५) हे अहले किताब ! तिमी इब्राहीमको विषयमा किन विवाद गर्दछौ ? जबकि तौरात र इंजील त उनी पश्चात उतारियो ? के तिमी तैपनि बुझ्दैनौ ?[1]

هَٰٓأَنتُمۡ هَٰٓؤُلَآءِ حَٰجَجۡتُمۡ فِيمَا لَكُم بِهِۦ عِلۡمٞ فَلِمَ تُحَآجُّونَ فِيمَا لَيۡسَ لَكُم بِهِۦ عِلۡمٞۚ وَٱللَّهُ يَعۡلَمُ

(६६) सुन, तिमीहरू त्यसमा विवाद (झगडा) गरिसक्यौ, जसको तिमीलाई ज्ञान थियो, अब यसमा किन झगडा गर्दछौ, जसको तिमीलाई ज्ञान नै छैन ।[2]

---

(فَأَسْلِمْ تَسْلِمْ، أَسْلِمْ يُؤْتِكَ اللَّهُ أَجْرَكَ مَرَّتَيْنِ، فَإِنْ تَوَلَّيْتَ، فَإِنَّ عَلَيْكَ إِثْمَ الأَرِيسِيِّنَ)

"इस्लाम स्वीकार गर, सुरक्षित रहने छौ । इस्लाम ल्याउ, अल्लाह तआला दुई गुना पुण्य दिनेछ, परन्तु यदि तिमीले इस्लाम धर्म स्वीकार गर्नबाट इन्कार गऱ्यौ भने प्रजाको पाप पनि तिमीमाथि हुनेछ । किनभने प्रजाले इस्लाम धर्म स्वीकार नगर्नुको कारण पनि तिमी नै बन्नेछौ ।" (बुखारी, किताब बदउल वह्यी)

यस आयतमा तीन वटा कुराको वर्णन छ अर्थात (१)– मात्र अल्लाहको इबादत गर्नु । (२)– उससँग कसैको पनि मिश्रण नगर्नु । (३)– र कसैलाई पनि धार्मिक नियमावली बनाउन अल्लाहको अधिकार अथवा स्थान नदिनु, ती समानताका शब्द हुन् जसमा अहले किताबलाई एकताको आमन्त्रण दिइएको छ । अत: यस उम्मतका छरिएका कुरालाई एकत्रित गर्नुको पनि यी तीन विन्दुहरू र यस समानताको कुरोलाई सर्वप्रथम आधारशिला बनाउनु पर्दछ ।

[1]आदरणीय इब्राहीमको विषयमा झगडाको अर्थ छ कि यहूदी र इसाई दुबै यो दाबी गर्दथे कि आदरणीय इब्राहीम उनीहरूका धर्म मान्नेवाला थिए, यद्यपि तौरात जसमा यहूदी विश्वास गर्दछन् र इंजील जसलाई इसाई पवित्र पुस्तक मान्दछन्, दुबै आदरणीय इब्राहीमको सयकडौं वर्षपछि अवतरित भए, अनि आदरणीय इब्राहीम यहूदी तथा इसाई कसरी हुन सक्थे ? भनिन्छ कि आदरणीय इब्राहीम र आदरणीय मूसा बीच एक हजार वर्षको अवधिको अन्तर छ र आदरणीय ईसा र आदरणीय मूसा बीच दुई हजार वर्षको अन्तर थियो । (कुर्तुबी)

[2]तिम्रो ज्ञान र धर्मको त यो दशा छ कि जुन कुराको ज्ञान तिमीलाई छ अर्थात् आफ्नो धर्म तथा आफ्नो किताबको, यसको विषयमा तिम्रा विवादहरू (जसको वर्णन पछिल्लो आयतमा आइसकेको छ) सत्यतामा छैन तथा अज्ञानताको द्योतक पनि । अनि तिमी त्यस कुरामा किन वाद-विवाद गर्दछौ जसबारे तिमीलाई अलिकति पनि ज्ञान छैन ? अर्थात् आदरणीय इब्राहीमको श्रेष्ठता एवं विशेषता

وَأَنْتُمْ لَا تَعْلَمُونَ ﴿٦٦﴾

र अल्लाह (तआ़ला) जान्दछ, तिमी जान्दैनौ ।

مَا كَانَ إِبْرَاهِيمُ يَهُودِيًّا وَلَا نَصْرَانِيًّا وَلَٰكِنْ كَانَ حَنِيفًا مُسْلِمًا وَمَا كَانَ مِنَ الْمُشْرِكِينَ ﴿٦٧﴾

(६७) इब्राहीम न त यहूदी थिए न इसाई, बरु उनी शुद्धरूपले मात्र मुसलमान थिए ।[1] उनी मूर्तिपूजक (मिश्रणवादी) पनि थिएनन् ।

إِنَّ أَوْلَى النَّاسِ بِإِبْرَاهِيمَ لَلَّذِينَ اتَّبَعُوهُ وَهَٰذَا النَّبِيُّ وَالَّذِينَ آمَنُوا وَاللَّهُ وَلِيُّ الْمُؤْمِنِينَ ﴿٦٨﴾

(६८) सबैभन्दा अधिक इब्राहीमका निकटतम् ती मानिसहरू हुन्, जसले उनको भनाई माने र यो नबी, र जसले निष्ठा स्थापित गरे ।[2] निष्ठावानहरूको संरक्षक तथा सहायक अल्लाह छ ।

र उनको मिल्लत हनीफा (सोझो मार्गमा हिंड्ने कौम), जसको आधार एकेश्वरवाद तथा मात्र एक अल्लाहको इबादतमा छ ।

[1]حنيفاً مسلما (शुद्ध रूप मात्र मुसलमान) अर्थात मिश्रणसित घृणा गर्ने र मात्र एक अल्लाहको उपासना गर्नेवाला ।

[2]तात्पर्य नबी करीम सल्लल्लाहु अलैहि वसल्लम अझ साँचो मुसलमान हुन् किनभने इस्लाम धर्मका नियम मिल्लत हनीफ़ासित सबैभन्दा निकटतम् छ, यसैकारण कुर्आन करीममा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई मिल्लते इब्राहीमको पालन गर्नका लागि आदेश दिइएको छ ﴿أَنِ اتَّبِعْ مِلَّةَ إِبْرَاهِيمَ حَنِيفًا﴾ (अन-नम्ल-१२३) यसको अतिरिक्त हदीसमा छ । रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो:

«إِنَّ لِكُلِّ نَبِيٍّ وُلَاةً مِنَ النَّبِيِّينَ، وَإِنَّ وَلِيِّي مِنْهُمْ أَبِي وَخَلِيلُ رَبِّي عَزَّ وَجَلَّ»

"(प्रत्येक नबीहरूमध्ये केही मित्र हुन्छन्, ती मध्ये मेरा मित्र मेरो पिता र मेरो प्रभुका मित्र (इब्राहीम) हुन्, त्यसपछि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यही आयत पढ्नुभयो ।" (तिर्मिजी उधृत इब्ने कसीर)

وَدَّت طَّآئِفَةٌ مِّنْ أَهْلِ الْكِتَٰبِ لَوْ يُضِلُّونَكُمْ وَمَا يُضِلُّونَ إِلَّآ أَنفُسَهُمْ وَمَا يَشْعُرُونَ ﴿٦٩﴾

(६९) अहले किताबको (किताब प्रदान गरिएको) एउटा समूह चाहन्छ कि तिमीलाई मार्गविचलित गरिदेओस्, वास्तवमा उनीहरू स्वयं आफूलाई नै विचलित पारिराखेका छन् र बुझ्दैनन् ।[1]

يَٰٓأَهْلَ الْكِتَٰبِ لِمَ تَكْفُرُونَ بِـَٔايَٰتِ اللَّهِ وَأَنتُمْ تَشْهَدُونَ ﴿٧٠﴾

(७०) हे अहले किताब ! तिमी स्वयं साक्षी भए उपरान्त पनि अल्लाहका आयतहरूलाई किन मान्दैनौ ।[2]

يَٰٓأَهْلَ الْكِتَٰبِ لِمَ تَلْبِسُونَ الْحَقَّ بِالْبَٰطِلِ وَتَكْتُمُونَ الْحَقَّ وَأَنتُمْ تَعْلَمُونَ ﴿٧١﴾

(७१) हे अहले किताब ! जानीसकेपछि पनि सत्य र असत्यलाई किन मिसाईराखेका छौ ? र सत्यतालाई किन लुकाईराखेका छौ ?[3]

[1]यो यहूदीहरूको द्वेष र ईर्ष्याको स्पष्टीकरण हो, जुन उनी निष्ठावानहरूसित गर्दथे र यसै द्वेषका कारण मुसलमानहरूलाई मार्ग-विचलित गर्ने प्रयास गर्दथे । अल्लाह तआलाको आदेश भयो कि यसप्रकार उनीहरू स्वयंलाई अज्ञानतामा विचलित पारिराखेका छन् ।

[2]साक्षीहीनको अर्थ हो कि तिमीलाई नबी करीम सल्लल्लाहु अलैहि वसल्लमको सत्यता एवं वास्तविकताको ज्ञान छ ।

[3]यसमा यहूदीहरूका दुईटा ठूला अपराधीतिर संकेत गरी उनलाई छाडिदिन भनिदैछ । प्रथम अपराध यो कि सत्य र झूटलाई मिसाउनु, जसले गर्दा मानिसहरू सत्य र असत्य बीचको अन्तर जान्न नसकून् अर्थात सत्यलाई लुकाउनु । अर्थात् नबी करीम सल्लल्लाहु अलैहि वसल्लमका जुन गुण र विशेषताहरू तौरातमा लेखिएका थिए, तिनलाई मानिसहरूबाट लुकाउनु ताकि उहाँ सल्लल्लाहु अलैहि वसल्लमको सत्यता कम्सेकम यस रूपमा स्पष्ट हुन नसकोस् । र यी दुबै अपराध जानी-जानी गर्दथे जसबाट तिनलाई बुझ्न असम्भव भएको थियो । उनीहरूका अपराधतिर सूरः अल-बक़रःमा पनि संकेत गरियो ।

﴿ وَلَا تَلْبِسُوا الْحَقَّ بِالْبَاطِلِ وَتَكْتُمُوا الْحَقَّ وَأَنتُمْ تَعْلَمُونَ ﴾ [البقرة:٤٢]

"साँचोलाई झूठसित न मिसाउ र सत्य नलुकाउ र तिमी जान्दछौ ।" अहले किताबको शब्दलाई केही व्याख्याकारहरूले सामान्य राखेका छन्, जसमा यहूदी र इसाई दुबै सम्मिलित छन् । अर्थात् दुबैलाई यी अपराधहरूबाट रोकिन सावधान गरिएको छ । र केहीका निकट यसबाट तात्पर्य केवल ती यहूदी क़बीला (समुदाय) जुन मदीनामा निवास गर्दथे, बनू क़ुरैजा, बनू नजीर, तथा बनू कैनूकाअ । धेरै उचित कुरो यही लाग्दछ ।

(७२) र अहले किताबको एउटा समूहले भन्यो कि जे-जति पनि निष्ठावानहरूमाथि उतारिएको छ, त्यसमा सूर्योदय भएपछि निष्ठा व्यक्त गर र सन्ध्याको समय अस्वीकार गरि देऊ ताकि यिनीहरू पनि बिमुख भएर जाऊन् ।[1]

وَقَالَت طَّآئِفَةٌ مِّنْ أَهْلِ ٱلْكِتَٰبِ ءَامِنُوا۟ بِٱلَّذِىٓ أُنزِلَ عَلَى ٱلَّذِينَ ءَامَنُوا۟ وَجْهَ ٱلنَّهَارِ وَٱكْفُرُوٓا۟ ءَاخِرَهُۥ لَعَلَّهُمْ يَرْجِعُونَ ﴿٧٢﴾

(७३) र तिम्रा धर्ममा हिंड्नेहरूमा बाहेक अरु कसैमा विश्वास नगर ।[2] तपाईं भनिदिनुस् ! निःसन्देह मार्ग-दर्शन त अल्लाहकै मार्गदर्शन हो ।[3] (र यो पनि भन्दछन् कि यस कुरामा पनि विश्वास नगर) कि केही त्यस जस्तो दिइयोस् जस्तो तिमीलाई दिइएको छ ।[4] अथवा यो कि यिनी तिमीसित

وَلَا تُؤْمِنُوٓا۟ إِلَّا لِمَن تَبِعَ دِينَكُمْ قُلْ إِنَّ ٱلْهُدَىٰ هُدَى ٱللَّهِ أَن يُؤْتَىٰٓ أَحَدٌ مِّثْلَ مَآ أُوتِيتُمْ أَوْ يُحَآجُّوكُمْ عِندَ رَبِّكُمْ قُلْ إِنَّ ٱلْفَضْلَ بِيَدِ ٱللَّهِ يُؤْتِيهِ مَن يَشَآءُ وَٱللَّهُ وَٰسِعٌ عَلِيمٌ ﴿٧٣﴾

किनभने मुसलमानहरूको सोभै सम्बन्ध उनीहरूसित थियो र यी नै नबी सल्लल्लाहु अलैहि वसल्लमको विरोधमा धेरै भाग लिन्थे ।

[1]यो यहूदीहरूको एउटा अर्को चालको वर्णन हो, जसबाट उनी मुसलमानहरूलाई विचलित गर्न चाहन्थे कि उनीहरूले आपसमा यो विचार गरे कि प्रातः मुसलमान होऊन् र सन्ध्याको समय अस्वीकार गरिदिऊन् ताकि मुसलमानहरूलाई पनि आफ्नो इस्लामको विषयमा शंका उत्पन्न होस् कि यी मानिसहरू इस्लाम स्वीकार गरे उपरान्त आफ्नो धर्ममा पुनः फर्किहालेका छन्, त सम्भव छ कि इस्लाममा यस्ता अवगुण र त्रुटिहरू छन्, जुन उनको ज्ञानमा आएका हुन् ।

[2]यिनीहरूले आपसमा निर्णय गरे कि आडम्बरको लागि मुसलमान होऊ, परन्तु आफ्नो धर्म (यहूदी) बाहेक कुनै कुरामा विश्वास नगर्नु ।

[3]यो स्वयं एउटा वाक्य हो जसको (न त प्रारम्भिकसित न पछिका वाक्यसित) कुनै सम्बन्ध छ । केवल उनका चालहरूबाट वास्तविक कुरो यसबाट स्पष्ट गर्नु थियो, कि उनका चालहरूबाट केही हुनेछैन किनभने मार्ग-दर्शन दिनु त अल्लाहकै हातमा छ, त्यो जसलाई मार्गदर्शन प्रदान गर्दछ, त तिम्रा चालहरू त्यसमा बाधक बन्न सक्दैनन् । [4]यो पनि यहूदीहरूको कथन हो यसको पक्ष 'ولا تؤمنوا' मा छ । अर्थात् यो पनि स्वीकार नगर कि जस्तो तिमीकहाँ नबूअत आदि रहेको छ, यो अरु कसैलाई पनि प्राप्त हुनसक्छ र यसप्रकार यहूदीयत बाहेक कुनै अन्य धर्म पनि सत्य हुन सक्दछ ।

तिम्रो प्रभुको पासमा झगडा गर्नेछन्, तपाईं भनिदिनुस् कि कृपा त अल्लाह (तआ़ला) को हातमा छ । त्यो जसलाई चाहन्छ, त्यसलाई प्रदान गर्दछ, अल्लाह (तआ़ला) महान र सर्वज्ञ छ ।

يَخْتَصُّ بِرَحْمَتِهِۦ مَن يَشَآءُ ۗ وَٱللَّهُ ذُو ٱلْفَضْلِ ٱلْعَظِيمِ ﴿٧٤﴾

(७४) त्यो आफ्नो कृपाले जसलाई चाहन्छ विशेष गर्दछ, र अल्लाह (तआ़ला) परम कृपालु छ ।[1]

وَمِنْ أَهْلِ ٱلْكِتَٰبِ مَنْ إِن تَأْمَنْهُ بِقِنطَارٍ يُؤَدِّهِۦٓ إِلَيْكَ وَمِنْهُم مَّنْ إِن تَأْمَنْهُ بِدِينَارٍ لَّا يُؤَدِّهِۦٓ إِلَيْكَ إِلَّا مَا دُمْتَ عَلَيْهِ قَآئِمًا

(७५) र केही अहले किताब यस्ता पनि छन् कि तिमीले तिनीहरूलाई कोषको न्यासधारी बनाइदिए पनि तिमीलाई फर्काइदिन्छन्, र उनीहरूमध्ये यस्ता पनि छन् कि यदि तिमी उनीहरूलाई एक दिनार पनि अमानत (नासो)

[1]यस आयतको दुईटा अर्थ वर्णित गरिएको छ । एउटा यो कि यहूदीहरूका ठूला-ठूला विद्वान आफ्ना शिष्यहरूसित भन्दछन् कि सूर्योदय पश्चात ईमान स्थापित गर सूर्यास्ततिर काफिर भइहाल ताकि यस समय जो मुसलमान पनि छन्, उनीहरू भ्रममा परि मूर्तद हुनपुगन् । आ-आफ्ना शिष्यहरूलाई यो पनि शिक्षा दिन्छन् कि केवल देखावटीपनाको लागि मुसलमान हुनु । वास्तवमा मुसलमान नहुनु, बरु यहूदी नै रहनु । र यो नभन्ठान्नु कि जस्तो धर्म, जस्तो ईशवाणी (वह्यी), धार्मिक नियम र जस्तो ज्ञान र कृपा तिमीलाई दिइएको छ, त्यस्तो अरु कसैलाई पनि दिन सकिन्छ । अथवा तिमीबाहेक अरु कोही पनि सत्यतामा छ, जो तिम्रो विरुद्ध अल्लाह समक्ष तर्क प्रस्तुत गर्न सक्दछ । र तिमीलाई गलत ठहराउन सक्दछ । यस अर्थको आधारमा अल्लाह तआ़लाका विशेषताहरूको वर्णन भएको वाक्यलाई छाडि अन्य सम्पूर्ण वाक्य यहूदीहरूको कथन हो । दोस्रो अर्थ यो हो कि हे यहूदीहरू ! तिमी सत्यलाई दबाउन यी जुन चाल तथा योजनाहरू यसकारण बनाइराखेका छौ कि तिमीलाई दुख तथा ईर्ष्या छ कि जस्तो ज्ञान, कृपा, ईशवाणी (वह्यी) धार्मिक नियम तथा धर्म तिमीलाई दिइएको थियो, अब त्यस्तै ज्ञान कृपा र धर्म कुनै अन्यलाई किन प्रदान गरियो ? अर्को तिमीलाई यो शंका तथा भय छ कि यदि सत्यको यो आमन्त्रण अगाडी बढ्यो र उनीहरूले आफ्नो जरा सुदृढ गरे, भने न केवल संसारमा जुन मान-सम्मान तिमीलाई प्राप्त छ, त्यो समाप्त हुनेछ । बरु तिमीले जुन मान सम्मान लुकाएका छौ, त्यसको रहस्य पनि तिम्रो सामु स्पष्ट हुन्छ । र यस आधारमा यी मानिसहरू अल्लाहको निकट पनि तिम्रो विरुद्धमा तर्क स्थापित गर्नेछन् तर तिमीलाई ज्ञात हुनुपर्छ कि धार्मिक नियम अल्लाहको कृपा हो । र यो कसैको उत्तराधिकार होइन । बरु त्यो आफ्नो कृपा जसलाई चाहन्छ प्रदान गर्दछ । र त्यसलाई थाहा छ कि यो कृपा कसलाई प्रदान गर्नुछ ।

ذَٰلِكَ بِأَنَّهُمْ قَالُوا لَيْسَ عَلَيْنَا فِي الْأُمِّيِّينَ سَبِيلٌ وَيَقُولُونَ عَلَى اللَّهِ الْكَذِبَ وَهُمْ يَعْلَمُونَ ﴿٧٥﴾

को रूपमा दिन्छौ भने तिमीलाई फर्काउँदैनन्। जबसम्म तिमी उनी छेऊ उभि कडाइका साथ माँग्दैनौ यो यसकारण कि उनीहरूले भनिसकेका छन् कि हामीमाथि यी अशिक्षितहरूको अधिकारको कुनै पाप छैन, यिनीहरू जानिसके उपरान्त पनि अल्लाहप्रति झूठो कुरा बोल्दछन् ।[1]

بَلَىٰ مَنْ أَوْفَىٰ بِعَهْدِهِ وَاتَّقَىٰ فَإِنَّ اللَّهَ يُحِبُّ الْمُتَّقِينَ ﴿٧٦﴾

(७६) किन (पकड हुने छैन), तर जुन व्यक्ति आफ्नो वचन पूरा गर्दछन् र अल्लाह तआलासित तर्सन्छन्, त अल्लाह तआला पनि यस्ता तर्सनेहरूलाई आफ्नो मित्र बनाउँछ ।[2]

إِنَّ الَّذِينَ يَشْتَرُونَ بِعَهْدِ اللَّهِ وَأَيْمَانِهِمْ ثَمَنًا قَلِيلًا أُولَٰئِكَ لَا خَلَاقَ لَهُمْ فِي الْآخِرَةِ وَلَا

(७७) निःसन्देह जो अल्लाह (तआला) को वचन र आफ्ना शपथहरूलाई अलि कति मूल्यमा बेच्दछन्, उनीहरूका लागि आखिरतमा

---

[1] اُمِّيين (अशिक्षित अनपढ) सित तात्पर्य अरबका मूर्तिपूजक हुन् । यहूदीहरूका अपभोगी मानिसहरू यो दाबी गर्दथे कि यिनी मूर्तिपूजक हुन्, यसकारण यिनको माल हडप गर्नु उचित छ। यसमा कुनै पाप छैन । अल्लाह तआलाको आदेश भयो कि यिनीहरू अल्लाहबारे झूठो कुरा बोल्दछन् । अल्लाह तआला कसरी अरुहरूको माल हडप गर्ने आज्ञा प्रदान गर्नसक्छ ? र केही व्याख्याहरूमा वर्णन छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि यो सुनेर भन्नुभयो "अल्लाहका शत्रुहरूले असत्य भने, अज्ञानता कालका सबै कुराहरू म आफ्नो खुट्टामुनि कुल्चन्छु, अमानत (नासो) बाहेक कि त्यो प्रत्येक परिस्थितिमा फर्काउनु छ, चाहे त्यो कुनै सत्कर्मीको होस् अथवा कुकर्मीको होस् ।" (इब्ने कसीर तथा फतहुल कदीर) अफसोचको कुरा छ कि यहूदीहरू जस्तै आज केही मुसलमानहरू पनि मूर्तिपूजकहरूको माल हडप गर्ने कुरा गर्दछन् कि युद्ध स्थलीको ब्याज उचित छ, र योद्धाको मालको कुनै आदर छैन।

[2] "वचन पूरा गरुन् ।" को अर्थ हो त्यो वचन पूरा गरुन् जुन अहले किताबबाट अथवा प्रत्येक नबीको सन्दर्भले उनका उम्मतहरूबाट नबी सल्लल्लाहु अलैहि वसल्लममा निष्ठा स्थापित गर्ने विषयमा लिइएको छ । "र अल्लाहसित तर्सनु" अल्लाहद्वारा मनाही गरिएका कर्महरूबाट रोकियून् र ती कुराहरूका अनुसार कर्म गरुन् जुन नबी सल्लल्लाहु अलैहि वसल्लम वर्णित गर्नुहुन्छ । यस्ता मानिसहरू निःसन्देह अल्लाहको पकडबाट मुक्त रहनेछन्, बरु अल्लाहलाई प्यारो हुनेछन् ।

يُكَلِّمُهُمُ اللَّهُ وَلَا يَنظُرُ إِلَيْهِمْ يَوْمَ الْقِيَامَةِ وَلَا يُزَكِّيهِمْ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٧٧﴾

कुनै भाग छैन। अल्लाह (तआला) उनीसित न त कुरा गर्नेछ, र न केयामतका दिन उनीतिर हेर्नेछ, न उनीहरूलाई पवित्र गर्नेछ, र उनीहरूका निम्ति दुखद यातनाहरू छन्।[१]

وَإِنَّ مِنْهُمْ لَفَرِيقًا يَلْوُونَ أَلْسِنَتَهُم بِالْكِتَابِ لِتَحْسَبُوهُ مِنَ الْكِتَابِ وَمَا هُوَ مِنَ الْكِتَابِ وَيَقُولُونَ هُوَ مِنْ عِندِ اللَّهِ وَمَا هُوَ مِنْ عِندِ اللَّهِ وَيَقُولُونَ عَلَى اللَّهِ الْكَذِبَ وَهُمْ يَعْلَمُونَ ﴿٧٨﴾

(७८) अवश्य उनीहरूमध्ये यस्तो समूह पनि छ, जो किताब पढ्‌दाखेरि आफ्नो जिभ्रो बटार्दछ, ताकि तिमी त्यसलाई किताबकै लेख ठान, जबकि वास्तवमा त्यो किताबबाट हुँदैन र यो भन्दछन् पनि कि त्यो अल्लाह (तआला) को तर्फबाट हो, हाँलाकि वास्तवमा त्यो अल्लाह तआलाको तर्फबाट होइन, उनी त जानी-जानी अल्लाह (तआला) माथि झूठो आरोप लगाउँछन्।[२]

[१]उपरोक्त वर्णित मानिसहरूका विपरीत अन्य मानिसहरूको वर्णन गरियो र यी दुई प्रकारका मानिसहरू जसमध्ये एक त ती मानिसहरू हुन् जो अल्लाह तआलासित गरिएका वचन तथा सपथलाई पछाडि छाडि अलिकति आर्थिक लाभका लागि नबी सल्लल्लाहु अलैहि वसल्लमप्रति निष्ठावान हुँदैनन्। अर्का ती मानिस हुन्, जो झूठा शपथ ग्रहण गरी आफ्नो माल बेच्दछन् अथवा अरुको माल हडप गर्दछन्। जस्तो कि हदीसमा उहाँले भन्नुभयो:

"जुन व्यक्ति कसैको माल (सम्पत्ति) हडप गर्नलाई झूठो कसम खान्छ, त्यो अल्लाहसित यस दशामा भेट्‌छ कि अल्लाह त्यसमाथि साह्रै क्रोधित हुनेछ।" (सहीह बुखारी र मुस्लिम आदि) र यो पनि भन्नुभयो: "तीन व्यक्तिहरूसित अल्लाह तआला कुरा गर्ने छैन, न उनीतिर हेर्नेछ र न पवित्र गर्नेछ र उनीहरूको निम्ति दुखद यातना हुनेछ, उनीहरूमध्ये एउटा त्यो व्यक्ति हो, जो झूठो शपथद्वारा आफ्नो माल बेच्दछ।" (सहीह मुस्लिम) धेरैजसो हदीसहरूमा यी कुराहरूको वर्णन छ। (इब्ने कसीर र फतहुल कदीर)

[२]यो ती यहूदीहरूको वर्णन हो जसले अल्लाहको किताब (तौरात) मा न केवल परिवर्तन गरे बरु दुई अपराध अरु गरे, एक त जिभ्रो बटारी किताबका शब्द पढ्‌दथे, जसबाट जनतालाई कथानकको विपरीत प्रभाव दिन उनी सफल हुन्थ्यो। दोस्रो आफ्ना मनगढन्त कुराहरूलाई अल्लाहका कुरा भन्दथे। दुर्भाग्यले मुसलमानका धार्मिक मार्ग-दर्शकमा पनि, नबी सल्लल्लाहु अलैहि वसल्लमको भविष्यवाणी لَتَتَّبِعُنَّ سُنَنَ مَنْ كَانَ قَبْلَكُمْ (तिमी आफू भन्दा पहिलाका उम्मतहरूको पग-पग अनुसरण गर्नेछौ) को अनुरुप यस्ता धेरै मानिसहरू छन्, जो भौतिक स्वार्थ अथवा समूहगत संकीर्णता अथवा वैचारिक अवरोधको कारणले कुरआन करीमसित पनि यही

(७९) कुनै मानिसको लागि उचित छैन कि अल्लाह (तआला) ले किताब विज्ञान र नबूअत प्रदान गरोस्, अनि त्यो तै पनि मानिसहरूसित भनोस् कि अल्लाह (तआला) लाई छाडि मेरो भक्त बनिदेऊ बरु त्यो त भन्नेछ कि तिमी सबै मानिसहरू प्रभुको उपासक बन ।[1] यसकारण कि तिमी किताबको शिक्षा दिन्छौ र यसकारण कि तिमी स्वयं पनि पढ्दछौ ।[2]

مَا كَانَ لِبَشَرٍ أَن يُؤْتِيَهُ اللَّهُ الْكِتَابَ وَالْحُكْمَ وَالنُّبُوَّةَ ثُمَّ يَقُولَ لِلنَّاسِ كُونُوا عِبَادًا لِّي مِن دُونِ اللَّهِ وَلَٰكِن كُونُوا رَبَّانِيِّينَ بِمَا كُنتُمْ تُعَلِّمُونَ الْكِتَابَ وَبِمَا كُنتُمْ تَدْرُسُونَ ﴿٧٩﴾

(८०) र त्यसले तिमीलाई यो आज्ञा दिने छैन कि फरिश्ता (स्वर्गदूतहरू) तथा नबीहरू (ईशदूत) लाई आराध्य बनाउ । के आज्ञाकारी भएपश्चात

وَلَا يَأْمُرَكُمْ أَن تَتَّخِذُوا الْمَلَائِكَةَ وَالنَّبِيِّينَ أَرْبَابًا ۗ أَيَأْمُرُكُم بِالْكُفْرِ

यही व्यवहार गर्दछन् । पढ्दछन् कुरआनका आयत र विषय स्वयं रच्दछन् । जनता ठान्दछन् कि मोलवी साहबले समस्याको समाधान कुरआनबाट निकाल्नु भएको छ । वास्तवमा यस समाधानको कुरआनसित कुनै सम्बन्ध हुँदैन अथवा आयतका अर्थहरूमा परिवर्तन अथवा कृत्रिमताले काम लिन्छ ताकि सिद्ध गर्न सकियोस् कि यो अल्लाहको तर्फबाट छ ।

[1]यो इसाईहरूको विषयमा भनिंदैछ कि उनीहरूले आदरणीय ईसालाई पूज्य बनाइदिएका छन्, यद्यपि उनी एउटा मनुष्य थिए जसलाई किताब प्रवोध र नबूअतबाट सुशोभित गरिएको थियो । र यस्तो कोही व्यक्ति यो दावी गर्न सक्दैन कि अल्लाहलाई छाडि मेरो पूजारी र भक्त बन, बरु त्यो यो भन्दछ कि प्रभुवाला बन । رباني अल्लाहसित सम्बन्धित छ “नून र अलिफ़” को अधिकता अतिश्योक्तिको लागि छ ।

[2]अर्थात् अल्लाहको किताबको शिक्षा-दीक्षाको परिणामस्वरुप प्रभुको पहिचान र प्रभुसित विशेष सम्बन्ध स्थापित हुनुपर्छ । यसैप्रकार अल्लाहको किताबको ज्ञान राख्नेलाई यो आवश्यक छ कि मानिसहरूलाई पनि कुरआनको शिक्षा देओस् । यस आयतबाट यो स्पष्ट छ कि जब अल्लाहका पैगम्बरहरूलाई यो अधिकार छैन कि उनी मानिसहरूलाई आफ्नो बन्दना (इबादत) गर्न आदेश देउन्, भने यो अधिकार कुनै अन्यलाई कसरी प्राप्त हुनसक्दछ ?

بَعْدَ إِذْ أَنتُم مُّسْلِمُونَ ﴿٨٠﴾

तिमीलाई अवज्ञाकारी बन्ने आदेश दिनेछ।[1]

وَإِذْ أَخَذَ اللَّهُ مِيثَاقَ النَّبِيِّينَ لَمَا آتَيْتُكُم مِّن كِتَابٍ وَحِكْمَةٍ ثُمَّ جَاءَكُمْ رَسُولٌ مُّصَدِّقٌ لِّمَا مَعَكُمْ لَتُؤْمِنُنَّ بِهِ وَلَتَنصُرُنَّهُ قَالَ أَأَقْرَرْتُمْ وَأَخَذْتُمْ عَلَىٰ ذَٰلِكُمْ إِصْرِي قَالُوا أَقْرَرْنَا

(८१) र जब अल्लाह तआला नबीहरूबाट वचन लियो कि जे-जति म तिमीलाई किताब तथा विज्ञान प्रदान गर्दछु, त्यसपछि तिम्रो पासमा त्यो रसूल आउँछ, जो तिम्रा पासका वस्तुलाई सत्य बताउँछ भने तिम्रो लागि त्यसमाथि विश्वास गर्नु तथा उसको सहायता गर्नु आवश्यक छ।[2] आदेश गऱ्यो कि के तिमी यसलाई स्वीकार

[1]अर्थात् नबीहरू, फरिश्ताहरू (अथवा कुनै अन्यलाई) प्रभुका विशेषताहरूले युक्त ठान्नु अधर्म हो । तिमी मुसलमान भए पश्चात एउटा नबीले यसप्रकारको काम कसरी गर्न सक्दछ ? किनभने उनको काम त ईमानको आमन्त्रण दिनु हो जुन एउटा अल्लाह जसको कोही साभ्फीदार छैन, त्यसको बन्दना (इबादत) कै नाम हो । केही ब्याख्याकारहरूले यस आयतको अवतरणको कारणका सम्बन्धमा भनेका छन् कि केही मुसलमानहरूले नबी सल्लल्लाहु अलैहि वसल्लमसित यो आज्ञा प्राप्त गर्न चाहे कि सम्मान स्वरूप उनीहरू उनको दण्डवत (सजदा) गरून् । जस पश्चात यो आयत उत्र्यो। (फतहुल क़दीर) र केहीले यसको अवतरणबारे यो भनेका छन् कि यहूदीहरू र इसाईहरूले नबी सल्लल्लाहु अलैहि वसल्लमसित भने कि के तपाईं यो चाहनु हुन्छ कि हामी तपाईंको त्यसप्रकार आराधना गरौं जुन प्रकारले इसाई आदरणीय ईसाको गर्दछन् ? उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो: "अल्लाहले यस कुराबाट हाम्रो रक्षा गरोस् कि हामीले अल्लाहलाई छाडि कुनै अन्यको बन्दना गरौं अथवा कसैलाई यसको आदेश देऔं । अल्लाहले मलाई न यसकारण पठाएको छ र न यसको आदेश नै दिएको छ।" यसमाथि यो आयत उत्र्यो। (इब्ने कसीर उधृत सीरत इब्ने हिशाम)

[2]अर्थात् प्रत्येक नबीबाट यो वचन लिइएको छ कि यदि त्यसको समयमा कुनै अन्य नबी आयो भने त्यसमा विश्वास गर्नु र त्यसको सहायता गर्नु आवश्यक छ। जब नबीको उपस्थितिमा आउनेवाला नयाँ नबीमाथि स्वयं त्यस नबीलाई ईमान ल्याउन आवश्यक छ भने त्यसका अनुयायीहरूलाई त यस नयाँ नबीमा यस आदेशानुसार ईमान स्थापित गर्नु अति आवश्यक छ, केही ब्याख्याकारहरूले ﴿رَسُولٌ مُّصَدِّقٌ﴾ बाट الرسول को भावार्थ लिएका छन् अर्थात आदरणीय मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको विषयमा सबै नबीहरूसित वचन लिइयो कि उनको समयमा उनीहरू आउँछन् भने आफ्नो दूतत्व (नबूअत) समाप्त गरी उनीमाथि ईमान ल्याउनु पर्नेछ। परन्तु वास्तविकता यो छ कि पहिलो अर्थमा यो भावार्थ स्वयं आउँछ । यसकारण कुरआनका शब्दहरूका अनुसार पहिलो अर्थ नै अधिक उचित छ र यस भावार्थबाट यो कुरो स्पष्ट हुन्छ कि नबूअत मोहम्मदी

قَالَ فَاشْهَدُوْا وَاَنَا مَعَكُمْ مِّنَ الشّٰهِدِيْنَ ﴿٨١﴾

गर्दछौ र त्यसमाथि मेरो संकल्प लिइराखेका छौ त सबैले भने हामीलाई स्वीकार छ, हुकूम भयो, त्यसोभए साक्षी बस र म स्वयं पनि तिमीसित साक्षी छु ।

فَمَنْ تَوَلّٰى بَعْدَ ذٰلِكَ فَاُولٰٓئِكَ هُمُ الْفٰسِقُوْنَ ﴿٨٢﴾

(८२) अब यस पश्चात पनि जो विमुख हुन्छन्, तिनीहरू अवश्य अवज्ञाकारी हुन् ।[1]

اَفَغَيْرَ دِيْنِ اللّٰهِ يَبْغُوْنَ وَلَهٗٓ

(८३) के उनीहरू अल्लाह (तआ़ला) को धर्मको अतिरिक्त कुनै अन्य धर्मको खोजीमा छन् ।

(सल्लल्लाहु अलैहि वसल्लम) को ज्वलन्त सूर्य उपरान्त कुनै पनि नबीको दियो बल्न सक्दैन । जस्तो कि हदीसमा आउँछ कि एकपटक आदरणीय उमर तौरातको एक पन्ना पढिराखेका थिए, त नबी सल्लल्लाहु अलैहि वसल्लम यो देखेर साह्रै क्रोधित भएर भन्नुभयो :

"والذي نفسي بيده لو أصبح فيكم موسى عليه السلام ثم اتبعتموه و تركتموني لضللتم"

"कसम छ त्यस अस्तित्वको जसको हातमा मुहम्मदको प्राण छ कि यदि मूसा अलैहिस्सलाम पनि जीवित भएर आउँछन् र तिमी मलाई छाडि उनको अनुयायी बन्दछौ भने अवश्य नै मार्ग-विचलित हुनेछौ ।" (मुसनद अहमद उधृत इब्ने कसीर)

जे होस् अब प्रलय (क़ेयामत) सम्म अनुसरणीय केवल मुहम्मद रसूलुल्लल्लाहु अलैहि वसल्लम हुनुहुन्छ र मोक्ष उनैको अनुसरणमा निर्धारित छ न कि कुनै इमामको अनुयायी अथवा कुनै महात्माको वचनमा । जब अहिले कुनै पैग़म्बरको सिक्का चल्न सक्दैन भने कुनै अन्यको अनुकरण कुन प्रकारले हुन सक्दछ ?

[1]यो अहले किताब (यहूदी र इसाई) तथा अन्य धर्मावलम्बीहरूलाई चेतावनी हो कि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको आगमन पश्चात पनि उनमा ईमानको साटो आ-आफ्नो धर्मको पालन गर्नु यस वचनको विरुद्ध छ । जुन अल्लाह तआ़लाले प्रत्येक नबीद्वारा प्रत्येक उम्मत (समुदायहरू) बाट लिएको छ र यस वचनलाई भङ्ग गर्नु अधर्म हो । फ़िसक यहाँ कुफ्रको अर्थमा छ किनभने नबूअते मोहम्मदी (सल्लल्लाहु अलैहि वसल्लम) बाट इन्कार केवल फ़िसक होइन कुफ्र हो ।

أَسْلَمَ مَنْ فِي السَّمٰوٰتِ وَالْأَرْضِ طَوْعًا وَّكَرْهًا وَّإِلَيْهِ يُرْجَعُوْنَ ۝

जबकि आकाश र धर्तीमा जो कोही छन् सबै अल्लाह (तआला) कै आज्ञाकारी छन्। स्वेच्छाले भएपनि र दबाबले भएपनि सबैलाई उसतिर फर्काइने छ।

قُلْ اٰمَنَّا بِاللّٰهِ وَمَآ اُنْزِلَ عَلَيْنَا وَمَآ اُنْزِلَ عَلٰٓى اِبْرٰهِيْمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ وَيَعْقُوْبَ وَالْاَسْبَاطِ وَمَآ اُوْتِيَ مُوْسٰى وَعِيْسٰى وَالنَّبِيُّوْنَ مِنْ رَّبِّهِمْ ۖ لَا نُفَرِّقُ بَيْنَ اَحَدٍ مِّنْهُمْ ۖ وَنَحْنُ لَهٗ مُسْلِمُوْنَ ۝

(८४) तपाईं भन्नुस् कि हामीले अल्लाह (तआला) मा र जे-जति हामीमाथि उतारिएको छ र जुन इब्राहीम (अलैहिस्सलाम) र इस्माईल (अलैहिस्सलाम) र याकूब (अलैहिस्सलाम) र उनका सन्तानमाथि उतारिए, र जे-जति मूसा (अलैहिस्सलाम) र ईसा (अलैहिस्सलाम) र अन्यनबीहरूलाई अल्लाह (तआला) को तर्फबाट प्रदान गरिए ती सबै प्रति निष्ठा स्थापित गर्‍यौं।[२] हामी उनीमध्ये कसै प्रति भेदभाव गर्दैनौ र हामी अल्लाह (तआला) का आज्ञाकारी हौं।

[१]जब आकाश र धर्तीको कुनै वस्तु अल्लाह तआलाको सामर्थ्य तथा शक्तिभन्दा बाहिर छैन, चाहे त्यो प्रसन्नताले होस् वा अप्रसन्नताले, त तिमी त्यस समक्ष शिर निहुराउन (अर्थात इस्लाम स्वीकार गर्नबाट) कहाँ भागिराखेका छौ ? आउने आयतमा ईमान स्थापित गर्नु विधि भनेर पुनः भनिंदैछ कि प्रत्येक नबीको आकाशबाट उतारिएको प्रत्येक किताबमा बिना कुनै विभेद गरी ईमान राख्नु आवश्यक छ। पुनः भनिंदैछ कि इस्लाम धर्म बाहेक अन्य धर्म स्वीकृत हुनेछैन। कुनै अन्य धर्मका अनुयायीहरूको भाग्यमा केवल हानि बाहेक अरु केही हुनेछैन।

[२]अर्थात् सबै नबीहरूमा ईमान राख्नु (पूर्ण विश्वास गर्नु) कि उनीहरू आ-आफ्ना समयमा अल्लाहको तर्फबाट पठाइएका थिए। तथा उनीहरूलाई जुन किताबहरू र सूचनात्मक पृष्ठ धार्मिक नियमहरूका लागि उतारिए, तिनको विषयमा यो विश्वास राख्नु कि ती आकाशीय किताबहरू थिए, जुन वास्तवमा अल्लाहको तर्फबाट उतारिएका थिए, आवश्यक छ, परन्तु अब पालन केवल कुर्आनको आदेशानुसार हुनेछ किनभने कुर्आनले त्यसभन्दा अधिका किताबहरूलाई निरस्त गरिदिएको छ।

وَمَن يَبْتَغِ غَيْرَ الْإِسْلَامِ دِينًا فَلَن يُقْبَلَ مِنْهُ وَهُوَ فِي الْآخِرَةِ مِنَ الْخَاسِرِينَ ﴿٨٥﴾

(८५) र जुन व्यक्ति इस्लामको अतिरिक्त कुनै अन्य धर्मको खोजी गर्दछ, त्यसको धर्म मान्य हुने छैन र त्यो परलोक (आख़िरत) मा क्षतिग्रस्तहरूमा हुनेछ ।

كَيْفَ يَهْدِي اللَّهُ قَوْمًا كَفَرُوا بَعْدَ إِيمَانِهِمْ وَشَهِدُوا أَنَّ الرَّسُولَ حَقٌّ وَجَاءَهُمُ الْبَيِّنَاتُ ۚ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٨٦﴾

(८६) अल्लाह (तआ़ला) त्यस्ता व्यक्तिहरूलाई कसरी मार्गदर्शन गर्नेछ, जसले आफ्नो ईमान पश्चात इन्कारको नीति अपनाए, जबकि उनीहरू स्वयं यस कुराको साक्ष्य दीसके छन् कि यो रसूल साँचो छ, र उनको पासमा स्पष्ठ निशानीहरू पनि आइसकेका छन् ? अल्लाह अत्याचारीहरूलाई मार्गदर्शन गर्दैन

أُولَٰئِكَ جَزَاؤُهُمْ أَنَّ عَلَيْهِمْ لَعْنَةَ اللَّهِ وَالْمَلَائِكَةِ وَالنَّاسِ أَجْمَعِينَ ﴿٨٧﴾

(८७) उनीहरूको दण्ड यही हो कि उनीमाथि अल्लाह र फरिश्ताहरू (स्वर्गदूतहरू) तथा सबै मानिसहरूको धिक्कार छ ।

خَالِدِينَ فِيهَا لَا يُخَفَّفُ عَنْهُمُ الْعَذَابُ وَلَا هُمْ يُنظَرُونَ ﴿٨٨﴾

(८८) तिनीहरू यसैमा नित्य रहने छन्, न उनीहरूबाट यातना हलुको गरिने छ तथा न अवकाश दिइनेछ।

إِلَّا الَّذِينَ تَابُوا مِن بَعْدِ ذَٰلِكَ وَأَصْلَحُوا فَإِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿٨٩﴾

(८९) परन्तु जो यस पश्चात क्षमा-याचना एवं सुधार गर्दछन् त, निश्चय अल्लाह क्षमावान्, दयावान् छ ।[1]

[1]अन्सारमध्ये एउटा मुसलमान धर्मभ्रष्ट भई मूर्तिपूजकहरूमा सम्मिलित भयो, तर शीघ्र नै त्यसलाई पश्चाताप भयो र उसले केही व्यक्तिहरूद्वारा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसम्म सूचना पठायो कि هَل لي من توبة (के मेरो क्षमा स्वीकार हुनसक्दछ ?) त्यसमाथि यो आयत उत्र्यो । यसबाट ज्ञात भयो कि मूर्तदको दण्ड यद्यपि कठोर छ, किनभने त्यसले सत्यलाई जानिसके पश्चात ईर्ष्या, द्वेष एवं द्रोहको कारणले सत्यताबाट मुख फर्कायो र इन्कार गर्‍यो । परन्तु यदि कोही स्वच्छ हृदयले क्षमा माँगदछ र आफ्नो सुधार गर्दछ भने अल्लाह तआ़ला क्षमादाता तथा कृपालु छ, त्यसको पश्चाताप मान्य छ ।

إِنَّ الَّذِينَ كَفَرُوا بَعْدَ إِيمَانِهِمْ ثُمَّ ازْدَادُوا كُفْرًا لَّن تُقْبَلَ تَوْبَتُهُمْ وَأُولَٰئِكَ هُمُ الضَّالُّونَ ⑨٠

(९०) निःसन्देह जसले आफ्नो ईमान (विश्वास) पश्चात कुफ्र (अविश्वास) गरे । अनि अविश्वासमा अगाडी बढ्दै गए,[1] उनको क्षमा-याचना कदापि स्वीकार गरिने छैन[2] तथा तिनीहरू नै पथ-भ्रष्ट हुन् ।

إِنَّ الَّذِينَ كَفَرُوا وَمَاتُوا وَهُمْ كُفَّارٌ فَلَن يُقْبَلَ مِنْ أَحَدِهِم مِّلْءُ الْأَرْضِ ذَهَبًا وَلَوِ افْتَدَىٰ بِهِ

(९१) निःसन्देह जसले अस्वीकार (कुफ) गरे र अस्वीकार कै दशामा मरे त उनीहरू मध्ये कसैले धर्ती बराबर सुन यदि प्राण-मुक्तिको लागि दिन्छन् भने तैपनि, कदापि स्वीकार गरिने छैन ।

[1]यस आयतमा उनीहरूको दण्डको वर्णन भइराखेको छ, जो मूर्तद भएपश्चात क्षमा माँग्दैनन् तथा इन्कारको स्थितिमा मर्दछन् ।

[2]यसबाट त्यो क्षमाको तात्पर्य छ, जुन मृत्युको समय माँगिन्छ । अन्यथा क्षमाको ढोका प्रत्येक व्यक्तिको लागि हर समय खुला रहन्छ । यसबाट पहिलो आयतमा क्षमाको स्वीकृतिको वर्णन छ । यसको अतिरिक्त कुर्आनमा अल्लाह तआलाले पटक-पटक क्षमाको महत्व तथा स्वीकार गरिनुको सम्बन्धमा वर्णन गरेको छ :

وهو الذي يقبل التوبة عن عباده

"त्यो (अल्लाह) नै हो जो आफ्ना भक्तहरूको क्षमा स्वीकार गर्दछ ।" (अश्शूरा-२५)

ألم يعلموا ان الله هو يقبل التوبة عن عباده

"के उनीहरूले जानेनन् कि अल्लाह नै आफ्ना भक्तहरूको क्षमा स्वीकार गर्दछ ?" (अत्तौबा-१०४)

أُولَٰٓئِكَ لَهُمْ عَذَابٌ أَلِيمٌ وَمَا لَهُم مِّن نَّٰصِرِينَ ۝٩١

यस्ताका लागि दुखद यातना छ र उनीहरूको कोही सहायक हुने छैन ।[1]

[1]हदीसमा वर्णित छ कि अल्लाह तआ़ला केयामतका दिन एक नरकवासीसित भन्नेछ कि यदि तिम्रो पासमा संसारभरिको सामान (सामग्री) भयो भने के तिमी यस आगोको सट्टा दिन रुचाउने छौ ? त्यसले भन्नेछ, 'हो' । अल्लाह तआ़लाको आदेश हुनेछ कि संसारमा मैले त यसभन्दा सरल कुरोको माँग गरेको थिएँ कि मसँग कसैलाई सम्मिलित नगर्नु, तर तिमी सम्मिलित गर्नबाट रोकिएनौं । (मुसनद अहमद, अल-बुखा़री र मुस्लिम तथा इब्ने क़सीर) यसबाट ज्ञात भयो कि काफ़िरको लागि नरक़को स्थाई यातना छ । संसारमा यदि उसले कुनै पुण्य काम गर्‍यो भने अविश्वासको कारण त्यो पनि ब्यर्थ भयो । जस्तो कि हदीसमा छ कि अब्दुल्लाह बिन जदआ़नको विषयमा सोधियो कि त्यसले अतिथिहरुको स्वागत गर्दथ्यो, गरीबहरूको सहायता गर्दथ्यो र बन्धुवाा (दास) मानिसहरुलाई स्वतन्त्र गर्दथ्यो, के त्यसका यी कर्म त्यसका लागि हितकारी हुनेछन् । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, 'होइन' किनभने उसले एक दिन पनि आफ्नो प्रभुसित आफ्ना पापहरुका लागि क्षमा मागेन । (सहीह मुस्लिम, किताबुल ईमान) यसैप्रकार यदि कोही ब्यक्ति त्यहाँ धर्तीभरी सुन कुनै बन्दीलाई मुक्त गराउनको लागि मूल्य स्वरुप (फ़िदया भन्दछन्) दिन्छ र चाहन्छ कि त्यो नरकको यातनाबाट मुक्त होस्, त यो सम्भव हुने छैन, प्रथम त त्यहाँ कसैको पासमा के हुने छ र ? र यदि मानिहाले पनि कि उसको पासमा संसारभरीका कोषहरुको धन उपलब्ध छ र त्यो तिनलाई दिई यातनाबाट मुक्त होस्, त यो पनि हुनेछैन किनभने त्यसबाट त्यो प्रतिशोध अथवा फ़िदया स्वीकार गरिने छैन । जसरी अर्को स्थानमा आदेश गर्‍यो :

﴿وَلَا يُقْبَلُ مِنْهَا عَدْلٌ وَلَا تَنفَعُهَا شَفَٰعَةٌ﴾

"त्यसबाट कुनै बदला (साटो) स्वीकार गरिने छैन र न कुनै सिफा़रिश उसलाई लाभ पुर्‍याउने छ ।" (अल-बक़र:-१२३)

﴿لَّا بَيْعٌ فِيهِ وَلَا خِلَٰلٌ﴾

"त्यहाँ न क्रय-विक्रय हुनेछ न कुनै मित्रता ।" (सूर: इब्राहीम-३१)

لَن تَنَالُوا الْبِرَّ حَتَّىٰ تُنفِقُوا مِمَّا تُحِبُّونَ ۚ وَمَا تُنفِقُوا مِن شَيْءٍ فَإِنَّ اللَّهَ بِهِ عَلِيمٌ ﴿٩٢﴾

(९२) जवसम्म तिमी आफ्नो प्रिय धनबाट अल्लाह (तआला) को बाटोमा व्यय गर्ने छैनौं, कहिल्यै भलाई प्राप्त गर्ने छैनौं ।[1] र जे-जति तिमी व्यय गर्दछौ, त्यसलाई अल्लाह (तआला) राम्ररी जान्दछ ।[2]

كُلُّ الطَّعَامِ كَانَ حِلًّا لِّبَنِي إِسْرَائِيلَ إِلَّا مَا حَرَّمَ إِسْرَائِيلُ عَلَىٰ نَفْسِهِ مِن قَبْلِ أَن تُنَزَّلَ التَّوْرَاةُ ۗ قُلْ فَأْتُوا بِالتَّوْرَاةِ فَاتْلُوهَا

(९३) तौरात उतर्नुभन्दा अघि नै (आदरणीय) याकूब (अलैहिस्सलाम) ले जुन कुरोलाई आफूमाथि हराम (अवैध) गरेका थिए, त्यसका अतिरिक्त सबै खाना इस्राईलका सन्तानको

[1] بِرّ (बिर्र) को अर्थ हो पुण्य तथा भलाई । परन्तु यहाँ त्यसको अर्थ छ सत्कार्य अथवा स्वर्ग (फ़तहुल क़दीर) । हदीसका अनुसार जब यो आयत उत्र्यो, त्यसवेला मदीनामा आदरणीय अबू तलहा अन्सारी एक धनवान् व्यक्ति थिए, नवी करीम सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भए र भने कि हे रसूलुल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) ! वेरोहा बाग (एउटा बगैंचाको नाम) मलाई धेरै प्रिय छ, म त्यसलाई अल्लाहको प्रसन्नता प्राप्त गर्नको निम्ति दान गर्दछु । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "त्यो त साह्रै लाभदायक माल हो, मेरो विचार यो छ कि तिमी त्यसलाई आफ्ना सम्वन्धिहरु र काकाका भाइहरूमा बाँडिदेउ ।" (मुसनद अहमद) यसप्रकार अन्य कैयन् सहावाले आफ्ना रुचिकर कुराहरू अल्लाहको मार्गमा बाँडिदिए । (مِن) मा (مِمَّا تُحِبُّونَ) केहीको अर्थमा प्रयोग भएको छ । अर्थात् सबै प्रिय धनलाई बाँड्ने आदेश भएको छैन, वरु प्रिय कुराहरूमा केही । यसकारण प्रयास यही गर्नुपर्छ कि राम्रो कुरा दान गरियोस् । यो श्रेष्ठता एवं पूर्ण पद प्राप्तिको विधि हो । यसको अर्थ यो कदापि होइन कि केही कम राम्रो, अथवा आफ्नो आवश्यकता भन्दा अधिक अथवा प्रयोग गरिएको पुरानो कुराको दान गर्न सकिन्न अथवा त्यसको प्रतिफल प्राप्त हुनेछैन । यसप्रकारका कुराको दान गर्नु पनि उचित छ तथा अल्लाह तआलाकहाँ प्रतिफल पनि प्राप्त हुनेछ । तर विशेषता तथा श्रेष्ठता प्रिय कुराको दान गर्नुमा छ ।

[2] तिमी जे-जति पनि व्यय गर्नेछौ राम्रो अथवा नराम्रो कुरो अल्लाह त्यसलाई जान्दछ । त्यसै अनुसार प्रतिफल प्रदान गर्नेछ ।

إِن كُنتُمْ صَٰدِقِينَ ﴿٩٣﴾

लागि वैध थिए यदि तिमी सच्चा हौ भने तौरात लिएर आउ अनि पढेर सुनाउ ।[1]

فَمَنِ ٱفْتَرَىٰ عَلَى ٱللَّهِ ٱلْكَذِبَ مِنۢ بَعْدِ ذَٰلِكَ فَأُو۟لَٰٓئِكَ هُمُ ٱلظَّٰلِمُونَ ﴿٩٤﴾

(९४) त्यस पश्चात पनि जुन मानिसहरू अल्लाह (तआ़ला) माथि झूठो लान्छना लगाउँछन्, ती नै अत्याचारी हुन् ।

قُلْ صَدَقَ ٱللَّهُ ۗ فَٱتَّبِعُوا۟ مِلَّةَ إِبْرَٰهِيمَ حَنِيفًا ۖ وَمَا كَانَ مِنَ ٱلْمُشْرِكِينَ ﴿٩٥﴾

(९५) भनिदिनुस् कि अल्लाह (तआ़ला) सत्य छ । तिमी सबै इब्राहीम हनीफ़को मिल्लत (धर्म) को अनुकरण गर, जो मूर्तिपूजक थिएन ।

إِنَّ أَوَّلَ بَيْتٍ وُضِعَ لِلنَّاسِ لَلَّذِى بِبَكَّةَ مُبَارَكًا وَهُدًى لِّلْعَٰلَمِينَ ﴿٩٦﴾

(९६) नि:सन्देह (अल्लाह तआ़ला) को पहिलो घर जुन मानवको निम्ति बनाइयो त्यही हो, जुन मक्का (नगरी) मा छ ।[2] जुन सम्पूर्ण विश्वका लागि शुभ एवं मार्गदर्शक छ ।

[1]यो र यस आयत पश्चातका दुई आयतहरू यहूदीहरूका यस विरोधमा अवतरित भए कि उनीहरूले नबी करीम सल्लल्लाहु अलैहि वसल्लमसित भने कि तपाईं इब्राहीमको धर्मको अनुयायी हुने दाबी गर्नुहुन्छ र ऊँटको मासु पनि खानुहुन्छ, जबकि ऊँटको मासु र दूध दुवै इब्राहीमको धर्ममा हराम (अवैध) थिए । अल्लाह तआ़लाले आदेश गऱ्यो कि यहूदीहरूको दाबी गलत छ । आदरणीय इब्राहीमको धर्ममा यी कुराहरू हराम थिएनन् तर केही कुरा इस्राईल (आदरणीय याक़ूब) ले आफ्नो निम्ति हराम (अवैध) गरिहालेका थिए । र त्यो यही ऊँटको मासु तथा दूध थियो (यसको कारण एक मन्नत (भाकल) अथवा रोग थियो) र आदरणीय याकूबको यो कर्म पनि तौरात उतर्नुभन्दा पहिलेको हो । यसकारण कि तौरात त आदरणीय इब्राहीम तथा आदरणीय याक़ूब भन्दा धेरै पछि उत्रेको हो, अनि तिमी कसरी उपरोक्त प्रश्न गर्न सक्दछौ ? यसको अतिरिक्त तौरातमा (यहूदीहरूमाथि) तिम्रा अत्याचारहरूका कारण केही खाद्य निषेधित गरिएको थियो । (सूर: अल-अनाम-१४६) तथा अल निसा-१६०) यदि तिमीलाई विश्वास छैन भने तौरात ल्याउ र त्यसलाई पढेर सुनाउ । जसबाट स्पष्ट हुनेछ कि आदरणीय इब्राहीमको समयमा यी खाद्य निषेध थिएनन् र तिम्रा लागि पनि केही कुरा निषेध गरिएको थियो, ती तिम्रा अत्याचार र कुकर्महरूका कारण भएका थिए अर्थात् तिनलाई हराम गर्नुको कारण पनि तिम्रा कुकर्महरूको दण्ड थिए (ऐसरूत्तफ़ासीर)

[2]यो यहूदीहरूको दोस्रो विरोधको उत्तर हो, उनीहरू भन्दथे कि बैतुल मक़दिस सबभन्दा पहिलो इबादत (उपासना) को घर धर्तीमा बन्यो । मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम तथा उनका साथीहरूले आफ्ना क़िब्ला किन परिवर्तित गरे ? यसको उत्तरमा भनियो कि तिम्रो यो दाबी पनि गलत छ ।

فِيهِ ءَايَٰتٌۢ بَيِّنَٰتٌ مَّقَامُ إِبْرَٰهِيمَ ۖ وَمَن دَخَلَهُۥ كَانَ ءَامِنًا ۗ وَلِلَّهِ عَلَى ٱلنَّاسِ حِجُّ ٱلْبَيْتِ مَنِ ٱسْتَطَاعَ إِلَيْهِ سَبِيلًا ۚ وَمَن كَفَرَ فَإِنَّ ٱللَّهَ غَنِىٌّ عَنِ ٱلْعَٰلَمِينَ ﴿٩٧﴾

(९७) जसमा स्पष्ट निशानीहरू छन्, "मुक़ामे इब्राहीम" (एउटा ढुङ्गा हो जसमा ख़ाना क़ाअबाको निर्माणको समय आदरणीय इब्राहीम उभिने गर्दथे र त्यो ढुङ्गा आवश्यकता अनुसार माथि उठ्थ्यो र तल आउँथ्यो) यसमा जो आउँदछ, निर्भय हुन्छ ।[1] अल्लाह (तआला) ले ती मानिसहरूमाथि जो त्यसतिर मार्ग पाउन सक्दछन्, त्यस घरको हज्ज अनिवार्य गरिदिएको छ ।[2] र जो कोही कुफ्र गर्दछ, त अल्लाह (तआला) सारा विश्वबाट निस्पृह छ ।[3]

قُلْ يَٰٓأَهْلَ ٱلْكِتَٰبِ لِمَ تَكْفُرُونَ بِـَٔايَٰتِ ٱللَّهِ وَٱللَّهُ شَهِيدٌ عَلَىٰ مَا تَعْمَلُونَ ﴿٩٨﴾

(९८) तपाईं भनिदिनुस् कि हे अहले किताब ! तिमी अल्लाहका आयतहरूलाई किन नकार्दछौ ? र जे-जति पनि गर्दछौ, अल्लाह (तआला) त्यसमाथि साक्षी छ ।

पहिलो घर जुन सर्वप्रथम अल्लाहको इबादतको लागि निर्मित गरिएको छ, त्यो मक्कामा छ ।

[1]यसमा हत्या, रक्तपात, शिकार यहाँसम्मकि रुखहरूलाई काट्नु पनि निषेध गरिएको छ । (सहीहैन)

[2]"मार्ग पाउन सक्दछौ ।" को अर्थ यो हो कि मार्ग व्ययको प्रवन्ध होस्, अर्थात यति धन होस् कि मार्ग व्यय सुविधापूर्वक पूरा होस् । यसको अतिरिक्त प्रवन्धबाट अर्थ यो पनि हो कि मार्गमा शान्ति होस् र ज्यान र माल सुरक्षित होस् । यसैप्रकार यो पनि आवश्यक छ कि स्वास्थ्य यात्रा योग्य होस् । यसको अतिरिक्त स्त्रीको लागि त्यसको महरम आवश्यक छ । (फ़तहुल क़दीर) यो आयत हरेक त्यस व्यक्तिको लागि जो यस प्रकारको प्रवन्ध गरोस्, त्यसको लागि हज्ज़ अनिवार्य हुने कुराको तर्क हो । र हदीसहरूबाट यस विषयको स्पष्टीकरण हुन्छ कि जीवनमा एक पटक हज्ज़ अनिवार्य छ । (तफ़सीर इब्ने क़सीर)

[3]हज्जको प्रवन्ध हुनुका बावजूद पनि हज्ज नगर्नु कुर्आनले यसलाई अधर्मसित सम्बोधित गरेको छ । जसबाट हज्ज अनिवार्य हुनुलाई झन् बल पुग्छ । हदीसहरूमा पनि यस्तो व्यक्तिलाई कठोर चेतावनी दिइएको छ । (तफ़सीर इब्ने क़सीर)

قُلْ يَٰٓأَهْلَ ٱلْكِتَٰبِ لِمَ تَصُدُّونَ عَن سَبِيلِ ٱللَّهِ مَنْ ءَامَنَ تَبْغُونَهَا عِوَجًا وَأَنتُمْ شُهَدَآءُ ۗ وَمَا ٱللَّهُ بِغَٰفِلٍ عَمَّا تَعْمَلُونَ ﴿٩٩﴾

(९९) ती अहले किताबसित भनिदिनुस् कि तिमी अल्लाह (तआला) को मार्ग (धर्म) बाट जो निष्ठावान छन् उनीहरूलाई किन रोक्दछौ र त्यसमा दोष खोजिराखेका छौ, जबकि तिमी स्वयं साक्षी छौ ?[1] र अल्लाह (तआला) तिम्रा कर्महरूबाट अनभिज्ञ छैन ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِن تُطِيعُوا۟ فَرِيقًا مِّنَ ٱلَّذِينَ أُوتُوا۟ ٱلْكِتَٰبَ يَرُدُّوكُم بَعْدَ إِيمَٰنِكُمْ كَٰفِرِينَ ﴿١٠٠﴾

(१००) हे निष्ठावानहरू ! यदि तिमी अहले किताबको कुनै समूहका कुरा मान्नेछौ भने उनीहरू निष्ठावान भए पश्चात तिमीलाई कुफ्रतिर फर्काईदिनेछन् ।[2]

[1]अर्थात तिमी जान्दछौ कि यो इस्लाम धर्म सत्य छ । यसका प्रचारक अल्लाहका सच्चा सन्देशवाहक हुन किनभने यी कुराहरू ती किताबहरूमा लेखिएका छन्, जुन तिम्रा नवीहरूमाथि उतारिए, र जसलाई तिमी पढ्दछौ ।

[2]यहूदीहरूको चालबाजी र धोकेबाजी र उनीहरूले मुसलमानहरूलाई पथ-विचलित गराउने योजनाहरू भनिसकेपछि, मुसलमानहरूलाई चेतावनी दिइँदैछ कि तिमी पनि तिनीहरूका हत्कण्डाबाट सावधान रह र कुरआनको तिलावत (पाठ) गर्ने र रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको उपस्थिति पश्चात पनि तिमी यहूदीहरूका जालमा न फँस । यसको पृष्ठभूमि तफ़सीरको कथनमा यसप्रकारले वर्णन भएको छ कि अन्सारका दुवै कवीला औस तथा खज़रज एक संघमा वसी आपसमा कुरा गरिराखेका थिए कि शास बिन कैस यहूदी त्यहाँबाट गुज्रयो र उनलाई प्रेमपूर्वक कुरा गरिराखेको देखेर ईर्ष्या गऱ्यो कि यिनीहरू पहिला एक-अर्काका कट्टर शत्रु थिए र इस्लाम धर्म स्वीकार गरे पश्चात एक-अर्कासँग सौहार्दपूर्ण वातावरणमा बसिरहेका छन् । उसले एक यहूदी नवयुवकलाई यो काम दियो कि त्यो औस र खज़रजलाई उनका बुआँस युद्धको स्मरण गराओस्, जुन उनीहरू बीच हिज़रत भन्दा केही दिन पूर्व भएको थियो र उनीहरूले जुन एक-अर्काको विरूद्ध गीत र कविताहरू लेखेका थिए, त्यो उनीहरूलाई सुनाओस् । अत: त्यसले यस्तै गऱ्यो जसबाट दुवै कबीलाहरू बीच पुरानो बैमनस्य फेरिबाट जागृत भयो र उनीहरू एक-अर्कालाई अपशब्द भन्नथाले, र यहाँसम्मकि एक-अर्काका विरूद्ध हथियार उठाउन तयार भए, यो कुरो निकट थियो कि उनीहरू एक-अर्काका हत्या गर्न प्रारम्भ गरिदिन्थे, यसैबीच रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम आइहाल्नु भयो र उनीहरूलाई सम्झाउनु भयो र उनीहरू रोकिए, यसमा यी आयतहरू र आगामी आयतहरू पनि अवतरित भए । (तफ़सीर इब्ने कसीर र फ़तहुल कदीर आदि)

(१०१) अब तिमी अस्वीकार कसरी गर्न सक्छौ जबकि अल्लाहका आयत पढेर सुनाइदैछन् र तिम्रो माँझमा रसूल (सल्लल्लाहु अलैहि वसल्लम) उपस्थित हुनुहुन्छ ? जो अल्लाह (तआला) को धर्मलाई मजबूतिले समात्छ ।[१] निःसन्देह त्यो सोझो मार्गमा आइहाल्यो ।

وَكَيْفَ تَكْفُرُوْنَ وَ اَنْتُمْ تُتْلٰى عَلَيْكُمْ اٰيٰتُ اللّٰهِ وَفِيْكُمْ رَسُوْلُهٗ ۭ وَمَنْ يَّعْتَصِمْ بِاللّٰهِ فَقَدْ هُدِيَ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿١٠١﴾

(१०२) हे ईमानवालाहरू ! अल्लाहसित त्यति तर्स जति उसित तर्सनु पर्दछ ।[२] र (हेर) मर्नेबेलासम्म मुसलमान नै रह ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اتَّقُوا اللّٰهَ حَقَّ تُقٰتِهٖ وَلَا تَمُوْتُنَّ اِلَّا وَاَنْتُمْ مُّسْلِمُوْنَ ﴿١٠٢﴾

(१०३) र अल्लाह (तआला) को डोरीलाई सबै मिलेर बलपूर्वक समात ।[३] र गुटबन्दी नगर ।[४] र अल्लाह (तआला) को

وَاعْتَصِمُوْا بِحَبْلِ اللّٰهِ جَمِيْعًا وَّلَا تَفَرَّقُوْا ۠ وَاذْكُرُوْا نِعْمَتَ اللّٰهِ عَلَيْكُمْ اِذْ كُنْتُمْ اَعْدَاۗءً فَاَلَّفَ بَيْنَ

---

[१]एतिसाम बिल्लाह (اعتصام بالله) को अर्थ हो अल्लाहको धर्मलाई मज़बूतिसित समात्नु, र त्यसको पालन गर्नमा आलस्य नगर्नु ।

[२]यसको अर्थ हो कि इस्लाम धर्मको आदेश एवं अनिवार्य कर्म पूर्णरुपले गरियून् र मनाही गरिएका कर्मको नजिक पनि नजाऊन् । केही धर्म गुरुहरूका भनाई छ कि यो आयत उत्र पश्चात सहाबा व्याकुल भए, त अल्लाह तआलाले आयत ﴿فَاتَّقُوا اللّٰهَ مَا اسْتَطَعْتُمْ﴾ (अल्लाहसित यथासम्भव तर्स) उतार्‍यो । तर यसलाई निरस्त गर्नुको सट्टा स्पष्टीकारी भनिन्छ भने अधिक उचित हुनेछ, किनभने निरस्त त्यही मान्नुपर्छ जहाँ दुबै आयतको समानता असम्भव हुन्छ । र यहाँ समानता सम्भव छ। अर्थ यो हुनेछ कि (اتقو الله حق تقاته ما استطعتم) (अल्लाहसित यसप्रकार तर्स, जुनप्रकार आफ्नो शक्तिअनुसार तर्सन सक्छौ) (फ़तहुल क़दीर)

[३]अल्लाहको भय पश्चात (सबै मिलेर अल्लाहको डोरीलाई मजबूतीले समात) को शिक्षा दिएर यो स्पष्ट गरिँदैछ कि मोक्ष पनि यी दुई नियमहरूमा छ र एकता पनि यिनै नियमहरूमा आधारित हुनसक्छ तथा शेष रहन सक्छ ।

[४](ولا تفرقوا) (र गुटबन्दी नगर) द्वारा गुटहरूमा विभाजित हुनबाट रोक लगाइएको छ । यसको अर्थ यो हो कि ती दुई नियमहरूबाट जसको वर्णन भइसकेको छ मुख फर्काउनुको कारण आपसमा फूट हुनसक्छ र तिमी अलग-अलग गुटहरूमा विभाजित हुनेछौ । अत: गुटबन्दीको इतिहास हेर्नुस् यिनै स्पष्ट भएर सामु आउनेछन् ।

قُلُوبِكُمْ فَأَصْبَحْتُمْ بِنِعْمَتِهِ إِخْوَانًا وَكُنْتُمْ عَلَىٰ شَفَا حُفْرَةٍ مِنَ النَّارِ فَأَنْقَذَكُمْ مِنْهَا كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ لَكُمْ آيَاتِهِ لَعَلَّكُمْ تَهْتَدُونَ ﴿١٠٣﴾

त्यो बेलाको कृपालाई स्मरण गर जब तिमीहरू आपसमा एक-अर्काको शत्रु थियौ । उसले तिम्रा हृदयमा प्रेम बसालिदियो र तिमी उसको कृपाले भाइ-भाइ भयौ । र तिमी आगोको खाल्डोको किनारसम्म पुगिसकेका थियौ, तब उसले तिमीलाई बचायो । अल्लाह (तआला) यसैप्रकार आफ्ना निशानीहरूको वर्णन गर्दछ, ताकि तिमी बाटो पाउन सक ।

وَلْتَكُنْ مِنْكُمْ أُمَّةٌ يَدْعُونَ إِلَى الْخَيْرِ وَيَأْمُرُونَ بِالْمَعْرُوفِ وَيَنْهَوْنَ عَنِ الْمُنْكَرِ ۚ وَأُولَٰئِكَ هُمُ الْمُفْلِحُونَ ﴿١٠٤﴾

(१०४) र तिमीहरूमध्ये एउटा गिरोह (समूह) यस्तो हुनुपर्छ, जो भलाईतिर बोलाउँछ र सत्कर्महरूको आदेश दिन्छ र कुकर्महरूबाट रोक्छ र यिनै मानिसहरू सफल हुनेछन् ।

وَلَا تَكُونُوا كَالَّذِينَ تَفَرَّقُوا وَاخْتَلَفُوا مِنْ بَعْدِ مَا جَاءَهُمُ الْبَيِّنَاتُ ۚ وَأُولَٰئِكَ لَهُمْ عَذَابٌ عَظِيمٌ ﴿١٠٥﴾

(१०५) र तिमी ती मानिसहरू जस्तो न भइहाल्नु जसले आफ्नो पासमा स्पष्ट तर्क आइसके पश्चात पनि फूट र भेद पारे ।[1] यिनैको लागि कठोर यातना छ ।

कुरआन र हदीसलाई बुझ्ने र त्यसको भाष्य तथा व्याख्यामा केही मतभेद, यो गुटबन्दीको कारण होइन, यो मतभेद त सहाबा तथा ताबईनको समयमा पनि थियो, तर मुसलमान गुटहरूमा विभाजित थिएनन् । किनभने आपसी मतभेद भएपनि सबैको पालनको केन्द्र तथा विश्वासको बिन्दु एउटै थियो र त्यो हो कुरआन र रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको हदीस, र जब व्यक्तित्वको नाममा विचारहरूको प्रदर्शन हुनथाल्यो, त पालन र विश्वासको यो केन्द्र तथा बिन्दु परिवर्तित भयो । आ-आफ्ना व्यक्तिहरू र तिनका कथन तथा विचार प्रथम स्थानमा तथा अल्लाह र त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लमका कथन तथा आदेश द्वितीय स्थानमा गरिए । र यहीबाट उम्मते मुसलिमा गुटबन्दी आरम्भ भयो, जुनकि दिन-प्रतिदिन बढ्दै गयो र अति सुदृढ हुँदै गयो ।

[1]ज्वलन्त तर्क आइसके पश्चात विभेद पारियो । यसबाट ज्ञात भयो कि यहूदी र इसाईहरू बीच भेदको यो कारण थिएन कि उनीहरूलाई सत्य थाहा थिएन र त्यसको तर्फबाट अनभिज्ञ थिए । बरु वास्तवमा उनीहरूले सबै कुरा थाहा हुँदाहुँदै आफ्ना सांसारिक लाभ एवं स्वार्थको लागि मतभेद तथा भेदको मार्ग

يَوْمَ تَبْيَضُّ وُجُوهٌ وَتَسْوَدُّ وُجُوهٌ ۚ فَأَمَّا الَّذِينَ اسْوَدَّتْ وُجُوهُهُمْ أَكَفَرْتُم بَعْدَ إِيمَانِكُمْ فَذُوقُوا الْعَذَابَ بِمَا كُنتُمْ تَكْفُرُونَ ﴿١٠٦﴾

(१०६) जुन दिन केही अनुहारहरू उज्जवल हुनेछन् र केही अँध्यारा ।[1] अँध्यारा अनुहार भएका (सित भनिनेछ) कि तिमीले ईमान स्थापित गरे पश्चात अविश्वास किन गऱ्यौ ? आफ्नो इन्कारको यातना चाख ।

وَأَمَّا الَّذِينَ ابْيَضَّتْ وُجُوهُهُمْ فَفِي رَحْمَةِ اللَّهِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿١٠٧﴾

(१०७) र उज्जवल अनुहार भएका अल्लाह (तआला) को दयालुतामा हुनेछन् र त्यसमा सधैं रहनेछन् ।

تِلْكَ آيَاتُ اللَّهِ نَتْلُوهَا عَلَيْكَ بِالْحَقِّ ۗ وَمَا اللَّهُ يُرِيدُ ظُلْمًا لِّلْعَالَمِينَ ﴿١٠٨﴾

(१०८) (हे नबी) ! हामी यी सत्य आयतहरु पाठ (तिलावत) तपाईंलाई सुनाई राखेका छौं र अल्लाह (तआला) को विचार मानिसहरूमाथि अत्याचार गर्नु होइन ।

وَلِلَّهِ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۚ وَإِلَى اللَّهِ تُرْجَعُ الْأُمُورُ ﴿١٠٩﴾

(१०९) र अल्लाह (तआला) कै लागि छ, जे-जति आकाशहरू तथा धर्तीमा छ र अल्लाह (तआला) तिर सबै कर्महरूलाई फर्काइन्छ ।

كُنتُمْ خَيْرَ أُمَّةٍ أُخْرِجَتْ لِلنَّاسِ تَأْمُرُونَ بِالْمَعْرُوفِ وَتَنْهَوْنَ عَنِ الْمُنكَرِ وَتُؤْمِنُونَ بِاللَّهِ ۗ وَلَوْ آمَنَ أَهْلُ الْكِتَابِ لَكَانَ

(११०) तिमी सर्वश्रेष्ठ उम्मत (समुदाय) हौ, जुन मानिसहरूका लागि सृष्टि गरिएको छ कि तिमी सत्कर्महरूको आदेश गर्दछौ र कुकर्महरूबाट रोक्दछौ र अल्लाह (तआला) मा ईमान

समातेको थियो र त्यसमा डटिराखेको थियो । कुरआन करीमले विभिन्न शैली र तरीकाले बारम्बार यस वास्तविकतातिर औंल्याएको छ । र यसबाट टाढा रहन जोड दिएको छ । तर दुखको कुरा छ कि यस उम्मतका भेद पार्नेहरूले पनि ठीक त्यही रीति समातेका छन् कि सत्य र त्यसको स्पष्ट तर्क उनीहरूलाई राम्रो तरिकाले ज्ञात छ तर उनीहरू आफ्ना भेदभावमा अडिग छन् र आफ्नो पूर्ण मानसिक अर्हता पूर्वका समुदायहरू जस्तै कल्पना एवं फेरबदलको घृणित कार्यमा खेर फालिराखेका छन् ।

[1]आदरणीय इब्ने अब्बास (رضى الله عنهما) ले यसबाट अहले सुन्नत वल जमाअत र अहले बिदअत तात्पर्य लिनुभएको छ । (इब्ने कसीर तथा फ़तहुल क़दीर) यसबाट ज्ञात भयो कि इस्लाम त्यही हो जसमा अहले सुन्नत वल जमाअत कार्यरत छन् । र अहले बिदअत एवं विरोध उत्पन्न गर्ने मानिसहरू इस्लामको त्यस वरदानबाट बञ्चित छन्, जुन मोक्षको कारण छ ।

خَيْرًا لَّهُمْ ۚ مِّنْهُمُ الْمُؤْمِنُونَ وَأَكْثَرُهُمُ الْفَاسِقُونَ ﴿١١٠﴾

कायम राख्दछौ ।[1] यदि अहले किताब ईमान स्थापित गरेको भए उनीहरूको लागि उत्तम हुन्थ्यो । उनीहरूमा ईमानवालाहरू पनि छन् ।[2] तर अधिकतर मानिसहरू फ़ासिक (अवज्ञाकारी) छन् ।

لَن يَضُرُّوكُمْ إِلَّا أَذًى ۖ وَإِن يُقَاتِلُوكُمْ يُوَلُّوكُمُ الْأَدْبَارَ ثُمَّ لَا يُنصَرُونَ ﴿١١١﴾

(१११) यिनीहरू तिमीलाई दुख दिन बाहेक अरु केही हानि पुऱ्याउन सक्दैनन् । र यदि तिमीसित लडाई हुन्छ भने पिठ्यूँ फर्काउनेछन् । अनि तिनीहरूलाई सहायता दिइने छैन ।[3]

---

[1]यस आयतमा मुस्लिम उम्मतलाई सर्वश्रेष्ठ समुदाय भनिएको छ । र यसको कारण पनि स्पष्ट गरिएको छ कि जो राम्रा कर्महरूको आदेश गर्दछन् र नराम्रा कर्महरुबाट रोक्दछन् र अल्लाहमा विश्वास गर्दछन् अर्थात् यो समुदाय यदि यी श्रेष्ठ विशेषताहरूबाट विभूषित रहनेछ भने सर्वश्रेष्ठ समुदाय छ, नत्र यस विभूषणवाट वञ्चित गर्न सकिन्छ । यस उपरान्त अहले किताबको (किताब प्रदान गरिएका) आलोचनावाट पनि यस विन्दुको स्पष्टीकरण ज्ञात हुन्छ कि जो पनि सत्कर्मको आदेश र कुकर्मको अवरोध गर्ने छैन, त्यो पनि अहले किताबकै समान हुनेछ । उनको विशेषताको वर्णन गरिएको छ ।

﴿كَانُوا لَا يَتَنَاهَوْنَ عَن مُّنكَرٍ فَعَلُوهُ﴾

"उनीहरू एक-अर्कालाई नराम्रो कुराबाट रोक्दैनथे ।" (अल-मायदा-७९)

र यहाँ यसै आयतमा उनीमध्ये अधिकतरलाई धर्महीन भनिएको छ । सत्कर्महरूको आदेश दिनु सामान्य मानिसहरूका लागि अनिवार्य छ अथवा विद्वानहरूको दायित्व हो । अधिकतर विद्वानहरू (आलिमहरु) को विचार छ कि यो विशिष्ट व्यक्तिहरूका लागि अनिवार्य छ, अर्थात् विद्वानहरूको कर्तब्य हो कि यस दायित्वलाई पूरा गरिराखुन् किनभने सत्कर्म र कुकर्म धार्मिक नियम अन्तर्गत राम्रो र नराम्रोको ज्ञान उनैलाई छ । उनीहरूद्वारा प्रचार-प्रसार एवं आमन्त्रणको कर्तब्य निर्वाह गर्नुको कारण उम्मतका अन्य सबै व्यक्तिहरूबाट यो कर्तब्य समाप्त हुनेछ । जस्तै ज़िहाद (धर्मयुद्ध) पनि सामान्य परिस्थितिहरूमा साधारण कर्तब्य हो । अर्थात् एक समूहको तर्फबाट निर्वाहले शेष सबैको कर्तब्य समाप्त हुनेछ ।

[2]जस्तै अब्दुल्लाह बिन सलाम आदि जो मुसलमान भएका थिए । तर उनको संख्या कम थियो । अत: (مِّنْهُمُ) मा (مِنْ) केही अन्य अर्थको निम्ति प्रयोग भएको छ ।

[3](أَذًى) (दुख दिनु) बाट तात्पर्य मौखिक रुपले कलंकित गर्नु तथा मिथ्यावाद तथा आरोप हो जसबाट हृदयलाई सामयिक दुख हुन्छ, परन्तु यिनीहरू रणक्षेत्रमा तिमीलाई पराजित गर्न सक्दैनन् ।

ضُرِبَتْ عَلَيْهِمُ الذِّلَّةُ أَيْنَ مَا ثُقِفُوٓا۟ إِلَّا بِحَبْلٍ مِّنَ اللَّهِ وَحَبْلٍ مِّنَ النَّاسِ وَبَآءُو بِغَضَبٍ مِّنَ اللَّهِ وَضُرِبَتْ عَلَيْهِمُ الْمَسْكَنَةُ ۚ ذَٰلِكَ بِأَنَّهُمْ كَانُوا۟ يَكْفُرُونَ بِـَٔايَٰتِ اللَّهِ وَيَقْتُلُونَ الْأَنۢبِيَآءَ بِغَيْرِ حَقٍّ ۚ ذَٰلِكَ بِمَا عَصَوا۟ وَّكَانُوا۟ يَعْتَدُونَ ﴿١١٢﴾

(११२) यिनी प्रत्येक ठाउँमा अपमानित छन्, यो अर्कै कुरा हो कि अल्लाह (तआला) को अथवा मानिसहरूको शरणमा छन् ।[1] यी अल्लाहको क्रोधका अधिकारी भए । र उनीहरूमाथि निर्धनता थोपियो । यो यसकारण कि यिनीहरू अल्लाह तआलाका आयतहरू मान्दैनथे र अकारण नबीहरूको हत्या गर्दथे । यो उनीहरूको अवज्ञता र सीमा उल्लंघनको कारण हो ।[2]

यसकारण यस्तै भयो । मदीनाबाट पनि यहूदीहरू निस्कनु पर्‍यो र पछि ख़ैबर पनि विजयी भयो । र उनीहरू त्यहाँबाट पनि निष्कासित गरिए । यसैप्रकार सीरियाको क्षेत्रमा इसाईहरू पनि मुसलमानहरूबाट पराजित हुनुपर्‍यो । यहाँसम्मकि इसाईहरूले कुसुएड (इसाई-मुस्लिम युद्ध) द्वारा बदला लिन प्रयत्न गरे र बैतुल मक़दिसमाथि अधिकार स्थापित गरे । तर त्यसलाई सुल्तान सलाहुद्दीन अय्युबीले नब्बे वर्ष पश्चात स्वतन्त्र गर्‍यो । तर अब मुसलमानहरूको ईमानको कमजोरीको कारण यहूदी र इसाईहरूका सहयोगी योजनाहरुका कारण बैतुल मक़दिस पुनः मुसलमानहरूको हातबाट निस्क्यो । परन्तु एक समय यस्तो आउनेछ कि यो परिस्थिति बदलिने छ । विशेषरुपले आदरणीय ईसाको आगमन पछि इसाई धर्मको समाप्ति तथा मुसलमानहरूको विजयश्री आवश्यक छ । जस्तो कि सहीह हदीसमा छ । (इब्ने कसीर)

[1]यहूदीहरूको जुन अपमान अथवा गत्यावरोध अल्लाहको क्रोधको कारण उनीमाथि छ, त्यसबाट केही समयका लागि बचावका दुईटा बाटो भनिएका छन् । एक त उनी अल्लाहको शरणमा आऊन् अर्थात् इस्लाम धर्म स्वीकार गरून् । अथवा कुनै इस्लामी राज्यमा शरणार्थी कर दिएर शरणार्थीको रुपमा निवास गरुन् । दोस्रो यो कि मानिसहरूको शरण प्राप्त होस्, यसका दुईटा भावार्थ वर्णित गरिएका छन् । एक यो कि इस्लामी राज्यको अतिरिक्त एउटा सामान्य मुसलमानले उनलाई शरण देओस्, जस्तो कि प्रत्येक मुसलमानलाई यो अधिकार प्राप्त छ र इस्लामी राज्यका राज्य अधिकारीहरूलाई यो चेतावनी दिइएको छ कि उनी कुनै सानोभन्दा सानो मुसलमान व्यक्तिद्वारा दिइएको शरण रद्द नगरुन् । दोस्रो यो कि कुनै ठूलो गैर मुस्लिम शक्तिको सहायता उनीहरूलाई प्राप्त होस् । किनभने (الناس) सामान्य छ, यसमा मुसलमान र ग़ैर मुस्लिम दुबै सम्मिलित छन् ।

[2]यी उनका कुकर्म हुन्, जसका कारण उनीमाथि यो अपमान थोपरिएको छ ।

لَيْسُوْا سَوَآءً ۭ مِنْ اَهْلِ الْكِتٰبِ اُمَّةٌ قَاۗىِٕمَةٌ يَّتْلُوْنَ اٰيٰتِ اللّٰهِ اٰنَاۗءَ الَّيْلِ وَھُمْ يَسْجُدُوْنَ ﴿١١٣﴾

(११३) यी सबै एकै समान छैनन्, बरु यी अहले किताबमा एउटा स्थिर समूह (सत्यमा) पनि छ । जो रात्रिमा अल्लाहका आयत पढ्छन् एवं सजदः (ढोग) गर्दछन् ।

يُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ وَيَاْمُرُوْنَ بِالْمَعْرُوْفِ وَيَنْهَوْنَ عَنِ الْمُنْكَرِ وَيُسَارِعُوْنَ فِي الْخَيْرٰتِ ۭ وَاُولٰۗىِٕكَ مِنَ الصّٰلِحِيْنَ ﴿١١٤﴾

(११४) यी अल्लाह तथा प्रलय प्रति विश्वास राख्दछन् । भलाईहरुको आदेश गर्दछन् र नराम्रा कुराबाट रोक्दछन् । र भलाईका कार्यहरूमा शीघ्रता गर्दछन् । यी सदाचारीहरू मध्ये हुन् ।

وَمَا يَفْعَلُوْا مِنْ خَيْرٍ فَلَنْ يُّكْفَرُوْهُ ۭ وَاللّٰهُ عَلِيْمٌۢ بِالْمُتَّقِيْنَ ﴿١١٥﴾

(११५) र यी जे-जति पनि भलाई गर्दछन्, त्यसको अनादर गरिने छैन र अल्लाह (तआला) परहेजगारहरूलाई राम्ररी जान्दछ ।[1]

اِنَّ الَّذِيْنَ كَفَرُوْا لَنْ تُغْنِىَ عَنْھُمْ اَمْوَالُھُمْ وَلَآ اَوْلَادُھُمْ مِّنَ اللّٰهِ شَيْــــًٔـا ۭ وَاُولٰۗىِٕكَ اَصْحٰبُ النَّارِ ۚ ھُمْ فِيْھَا خٰلِدُوْنَ ﴿١١٦﴾

(११६) नि:सन्देह विश्वासहीनहरूलाई तिनको धन तिनका सन्तान अल्लाहकहाँ केही काम आउने छैन, यी त नरकीय हुन् जसमा उनीहरू सधैं वास गर्नेछन् ।

---

[1]यी सारा अहले किताब होइन जसको अपमान पछिल्लो आयतमा गरियो । बरु तिनीहरूमा केही राम्रा मानिसहरू पनि छन् । जस्तै अब्दुल्लाह बिन सलाम, असद बिन उबैद, सालबा बिन साय: र उसैद बिन साय: आदि जसलाई अल्लाह तआलाले इस्लाम स्वीकार गर्ने सुअवसर प्रदान गऱ्यो र उनीहरूमा ईमान र अल्लाहप्रतिको तर्साइका विशेषताहरू पनि पाइन्छन् । उनीहरू अल्लाहसित प्रसन्न भए र अल्लाह उनीसित प्रसन्न भयो । (قَائِمَةٌ) को अर्थ हो धार्मिक नियमको पालना तथा नबी करीम सल्लल्लाहु अलैहि वसल्लमका अनुरकण गर्नेहरू । (يَسْجُدُوْنَ) को अर्थ हो रातहरुमा उभिन्छन् अर्थात् तहज्जुदको नमाज़ पढ्छन् र नमाज़हरूमा तिलावत (पाठ) गर्दछन् । यस स्थानमा (أمر بالمعروف) को अर्थ केही विद्वानले यो गरेका छन् कि नबी सल्लल्लाहु अलैहि वसल्लममाथि ईमान राख्न आदेश दिन्छन् र उहाँ सल्लल्लाहु अलैहि वसल्लमको विरोध गर्नबाट रोक्दछन् । यसै समूहको वर्णन अगाडी पनि गरिएको छ । ﴿وَإِنَّ مِنْ أَهْلِ الْكِتَابِ لَمَنْ يُؤْمِنُ بِاللَّهِ وَمَا أُنْزِلَ إِلَيْكُمْ وَمَا أُنْزِلَ إِلَيْهِمْ خَاشِعِينَ لِلَّهِ﴾ (आले-इमरान-१९९)

مَثَلُ مَا يُنْفِقُوْنَ فِيْ هٰذِهِ الْحَيٰوةِ الدُّنْيَا كَمَثَلِ رِيْحٍ فِيْهَا صِرٌّ اَصَابَتْ حَرْثَ قَوْمٍ ظَلَمُوْٓا اَنْفُسَهُمْ فَاَهْلَكَتْهُ ؕ وَمَا ظَلَمَهُمُ اللّٰهُ وَلٰكِنْ اَنْفُسَهُمْ يَظْلِمُوْنَ ﴿١١٧﴾

(११७) उनीहरू जे-जति यस संसारिक जीवनमा खर्च गर्दछन्, त्यो त्यस वायु समान छ जसमा तुषार छ जुन कुनै अत्याचारी कौमको खेतमा परी त्यसको नाश गरिदिन्छ।[1] अल्लाहले उनीमाथि अत्याचार गरेन, परन्तु उनी स्वतः अत्याचार गरिराखेका थिए।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَتَّخِذُوْا بِطَانَةً مِّنْ دُوْنِكُمْ لَا يَاْلُوْنَكُمْ خَبَالًا ؕ وَدُّوْا مَا عَنِتُّمْ ۚ

(११८) हे निष्ठावानहरू ! तिमी आफ्ना हार्दिक मित्र निष्ठावानहरूका अतिरिक्त कुनै अन्यलाई नबनाउ।[2] (तिमी देख्दैनौ, अरु मानिसहरू त)

[1] केयामतका दिन न काफ़िरहरूका धन काम आउनेछ न सन्तानहरू, यहाँसम्मकि भलाईका कामहरूमा व्यय गरिएको धन पनि व्यर्थ भइहाल्नेछ। र तिनीहरूको तुलना त्यस तुषारको जस्तो छ, जुन हरा-भरा खेतीलाई जलाएर नष्ट गरिदिन्छ। अत्याचारीहरू यी खेतीहरूलाई देखेर प्रसन्न भइराखेका हुन्छन् र लाभको आशा गर्दछन् कि सहसा तिनीहरूका आशा माटोमा बिलाएर जान्छन्। यसबाट ज्ञात भयो कि जबसम्म ईमान हुनेछैन तबसम्म हितका कार्यहरुमा धन व्यय गर्नेवाला संसारमा चाहे जति ख्याति किन नहोस्। परलोकमा उनीहरूलाई त्यसको फल प्रतिफल केही प्राप्त हुनेछैन। यहाँ त उनीहरूका लागि सधैं नरकवासको यातना नै छ।

[2] यो विषय पहिला पनि व्यतीत भइसकेको छ, यहाँ त्यसको विशेषताको कारण पुनरावृत्ति भइराखेको छ। (بطانة) अरबी शब्दकोषको अनुसार हार्दिक मित्र अर्थात भेदीलाई भनिन्छ। काफ़िर र मूर्तिपूजक मुसलमानहरूका लागि जुन भावना र प्रयत्न राख्दछन्, तिनीहरूमध्ये जसलाई स्पष्टरुपले भन्दछन् र जुन आफ्ना हृदयमा लुकाएर राख्दछन्। अल्लाह तआलाले ती सबैतिर संकेत गरेको छ। यो र यसप्रकारका अन्य आयतहरूको आधारमा आलिम र विचारकहरूले लेखेका छन् कि एक इस्लामी राज्यमा गैरमुस्लिमलाई महत्वपूर्ण पदहरूमा नियुक्त गर्न उचित छैन। भनिन्छ कि आदरणीय अबू मूसा अशअरी रज़ी अल्लाह अन्हुले एक ज़िम्मी (टेक्स तिरी इस्लामी देशमा बसोवास गर्ने गैंर मुस्लिम) लाई लिपिक (क्लर्क) आदरणीय उमर (रज़ी अल्लाह अन्हु) लाई जब यो कुरो थाहा भयो, तब उहाँले उनलाई धेरै हप्काउनु भयो र भन्नुभयो कि, "तिमी उनीहरूलाई निकट नगर, जबकि अल्लाहले उनीहरूलाई टाढा गरेको छ, उनीहरूलाई सम्मानित नगर, जबकि अल्लाहले उनीहरूलाई अपमानित गरेको छ र उनीहरूलाई विश्वस्त र मर्मज्ञ नबनाउ, जबकि अल्लाहले उनीहरूलाई अविश्वस्त भनेको छ।" आदरणीय उमर (रज़ी अल्लाह अन्हु) ले यसै आयतबाट यो भावार्थ निकाल्दै भन्नुभएको छ। इमाम कुर्तबी भन्दछन्, "यस समय अहले किताबलाई सचिव र न्यासिक बनाउनकै कारण परिस्थिति बदलिसकेका छन्, यसैकारण मूर्ख मानिसहरू प्रमुख तथा मन्त्री बनेका छन्।" (तफ़सीर कुर्तबी) दुर्भाग्यले आज

قَدْ بَدَتِ الْبَغْضَاءُ مِنْ أَفْوَاهِهِمْ وَمَا تُخْفِي صُدُورُهُمْ أَكْبَرُ قَدْ بَيَّنَّا لَكُمُ الْآيَاتِ إِن كُنتُمْ تَعْقِلُونَ ﴿١١٨﴾

तिम्रो बर्बादीमा कुनै कसर बाँकी राख्दैनन्, उनी त यो चाहन्छन् कि तिमी कष्टमा पर।[1] उनको शत्रुता त स्वयं उनको मुखबाट पनि स्पष्ट भइसकेको छ र त्यो जुनकि उनका छातिमा लुकेको छ। त्यो निकै धेरै छ। हामीले तिम्रो निम्ति आयतहरूको वर्णन गरिदियौं तिमी बुद्धिमान हौ (भने विचार गर)

هَا أَنتُمْ أُولَاءِ تُحِبُّونَهُمْ وَلَا يُحِبُّونَكُمْ وَتُؤْمِنُونَ بِالْكِتَابِ كُلِّهِ وَإِذَا لَقُوكُمْ قَالُوا آمَنَّا وَإِذَا خَلَوْا عَضُّوا عَلَيْكُمُ الْأَنَامِلَ مِنَ الْغَيْظِ قُلْ مُوتُوا بِغَيْظِكُمْ إِنَّ اللَّهَ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ﴿١١٩﴾

(११९) हो, तिमी त उनीहरूसित प्रेम गर्दछौ।[2] र उनी तिमीसित प्रेम गर्दैनन्, तिमी पूरा किताबलाई मान्दछौ र (उनी मान्दैनन् फेरि प्रेम कस्तो ?) यिनी तिम्रा सामू त आफ्नो ईमानलाई स्वीकार गर्दछन्, तर एकान्तमा क्रोधले औंलाहरू टोक्छन्।[3] भनिदेउ आफ्नो क्रोधमा नै मर्नेछौ। अल्लाह तआला छातिभित्रका कुरा राम्ररी जान्दछ।

इस्लामी राज्यमा कुरआन करीमको यस अत्याधिक महत्वपूर्ण आदेशलाई प्रमुखता दिइराखेको छैन र यसको विपरीत गैर मुस्लिम ठूला-ठूला तथा महत्वपूर्ण पदहरुमा आसीन छन्, जसका हानिहरू प्रत्यक्ष छन्। यदि इस्लामी राज्य आफ्नो आन्तरिक र निर्देश दुबै नीतिहरूमा यस आदेशको पालना गर्दछन् भने अवश्य धेरैजसो अशान्ति तथा हानिहरूबाट सुरक्षित रहन सक्छन्।

[1](لا يألون) को अर्थ हो आलस्य तथा कमी गर्ने छैनन्। (خبالا) को अर्थ हो उपद्रव र विनाश। (ما عنتم) को अर्थ हो जसबाट तिमी कठिनाईमा पर्दछौ। (عنت) को अर्थ कठिनाई हो।

[2]तिमी यी मुनाफ़िकहरूको नमाज़ र देखावटीपनाको ईमानको कारण उनको विषयमा धोकामा परिहाल्छौ र उनीसित प्रेम गर्दछौ।

[3](عض يعض) को अर्थ दाँतले टोक्नु हो। यो उनीहरूको क्रोधको अधिकता र तीब्रताको वर्णन हो, जस्तो कि आगामी आयत ﴿إن تمسسكم﴾मा पनि उनको यसै दशालाई स्पष्ट गरिदैछ।

إِنْ تَمْسَسْكُمْ حَسَنَةٌ تَسُؤْهُمْ ۚ وَإِنْ تُصِبْكُمْ سَيِّئَةٌ يَفْرَحُوا بِهَا ۖ وَإِنْ تَصْبِرُوا وَتَتَّقُوا لَا يَضُرُّكُمْ كَيْدُهُمْ شَيْئًا ۗ إِنَّ اللَّهَ بِمَا يَعْمَلُونَ مُحِيطٌ ﴿١٢٠﴾

(१२०) तिमीलाई यदि भलाई प्राप्त हुन्छ भने उनीहरूलाई नराम्रो लाग्दछ । (हो), यदि नराम्रो कुरा पुग्छ भने प्रसन्न हुन्छन् ।[1] यदि तिमी धैर्य राख्दछौ र परहेज़गारी गर्दछौ, उनको चाल तिमीलाई हानि पुऱ्याउने छैन ।[2] अल्लाह (तआ़ला) ले उनका कर्मलाई घेरिसकेको छ ।

وَإِذْ غَدَوْتَ مِنْ أَهْلِكَ تُبَوِّئُ الْمُؤْمِنِينَ مَقَاعِدَ لِلْقِتَالِ ۗ

(१२१) (हे नबी ! त्यस समयलाई पनि स्मरण गर्नुस्) जब बिहानै तपाईं आफ्नो घरबाट निस्केर मुसलमानहरूको रणक्षेत्रमा लडाईंको मोर्चामा

[1]यस आयतमा मुनाफ़िकहरूको त्यस घोर शत्रुताको वर्णन छ, जुन उनीहरूलाई मुसलमानहरूसित थियो र त्यो यो थियो कि जब मुसलमानहरूलाई सुख-शान्ति प्राप्त हुन्थ्यो, अल्लाह तआ़लाको तर्फबाट सहायता र विजय प्राप्त हुन्थ्यो र मुसलमानहरूको संख्या बढ्दथ्यो, त मुनाफ़िकहरूलाई नराम्रो लाग्थ्यो । र यदि मुसलमानहरूलाई कंगाल र निर्धन देख्दथे अथवा अल्लाह तआ़लाको इच्छा तथा कुनै कारणवश शत्रु केही समयका लागि मुसलमानहरूमाथि प्रभावी हुँदैजान्थे (जस्तो उहुदको युद्धमा भयो) त अति प्रसन्न हुन्थे । यस कुरालाई भन्नुको उद्देश्य तथा तात्पर्य यो हो कि जुन मानिसहरूको यो अवस्था छ, के मुसलमानहरूलाई उचित छ कि उनीसित प्रेम गरुन्, र उनीहरूलाई आफ्ना सल्लाहकार तथा मित्र बनाऊन् ? यसैकारण अल्लाह तआ़लाले यहूदी र इसाईहरूसित पनि मित्रता राख्न मनाही गरेको छ । (जस्तो कि कुर्आन करीममा अर्को ठाउँमा छ) यसैकारण कि उनी पनि मुसलमानहरूसित घृणा गर्दथे तथा शत्रुता राख्दथे, उनका सफलताबाट अप्रसन्न तथा उनका असफलताबाट प्रसन्न हुन्थे ।

[2]यो उनीहरूको छल तथा कपटबाट बच्नको लागि उपचार हो । अर्थात् द्वयवादीहरू तथा इस्लाम र मुसलमानहरूका शत्रुको चालबाट बच्नको लागि धैर्य तथा संयम अत्याधिक आवश्यक छ । यस धैर्य र संयमको कमीले ग़ैर मुस्लिमहरूको चाललाई सफल बनाइदिएको छ । मानिसहरू ठान्दछन् कि काफ़िरहरूको यो सफलता भौतिक संसाधनहरूको अधिकता तथा विज्ञान तथा प्रौद्योगिकमा उनको उन्नतिको कारण हो । जबकि वास्तविकता यो छ कि मुसलमानहरूको पतनको मूल कारण यही हो कि उनीहरू आफ्नो धर्ममा स्थिरता (जुन धैर्य चाहन्छ) बाट बञ्चित तथा संयमबाट टाढा भइहालेका छन् जुन मुसलमानहरूको सफलताको आधार तथा अल्लाहको पक्ष प्राप्त गर्ने मार्ग हो ।

وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿١٢١﴾

ठीक प्रकारले[1] मिलाइराख्नु भएको थियो, अल्लाह (तआ़ला) सर्वश्रोता तथा सर्वज्ञ छ ।

اِذْ هَمَّتْ طَّآئِفَتٰنِ مِنْكُمْ

(१२२) जब तिम्रा दुई समूहले साहस गुमाउने अवस्थामा पुगे ।[2]

[1]अधिकतर व्याख्याकारहरूका निकट यो उहुदको युद्धको घटना हो, जुन शव्वाल (रमज़ान पश्चातको महिना जसलाई ईदको महिना पनि भन्दछन्, तर वास्तविक अरबी नाम यो हो) ३ हिज़रीमा भयो । संक्षिप्त रुपमा घटना यसप्रकार छ कि जब बद्रको युद्धमा २ हिज़रीमा मूर्तिपूजकहरूले अपमानजनक पराजयको सामना गर्नुपऱ्यो किनभने उनीहरूका ७० वीर योद्धा मारिए र ७० बन्दी बनाइए, त ती मूर्तिपूजकहरूको लागि अपमान तथा डुबेर मर्ने स्थान थियो । अतः उनीहरूले मुसलमानहरूका प्रतिशोध लिनको लागि एक धेरै ठूलो युद्धको योजना सोचे, जसको तयारीमा मूर्तिपूजकका स्त्रीहरूले पनि भाग लिए । यता जब मुसलमानहरूलाई यो सूचना प्राप्त भयो कि उहुद पहाडको निकट तीन हजार मूर्तिपूजक मुसलमानहरूसित युद्धका निम्ति आफूलाई स्थिर गरिसकेका छन्, त नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले सहाबासित विचार-विमर्श गर्नुभयो कि मदीना शहरभित्र युद्ध लडियोस् अथवा बाहिर निस्केर मुक़ाबिला गरियोस् । केही सहाबाले मदीनाभित्र रही मुक़ाबिला गर्न परामर्श दिए र मुनाफ़िकहरूको सरदार अब्दुल्लाह बिन उबैयले पनि यस विचारसित पनि सहमति जनाए, तर यसको विपरीत केही साहसी सहाबाले जसलाई बद्रको युद्धमा भाग लिने अवसर प्राप्त भएको थिएन, उनीहरूले मदीना बाहिर मुक़ाबिला गर्न सुझाव दिए । उहाँ सल्लल्लाहु अलैहि वसल्लम आफ्नो कोठामा जानुभयो र हतियार तथा कवच धारण गरी बाहिर आउनुभयो, दोस्रो राय दिनेवालाहरूलाई क्षोभ भयो कि शायद हामीहरूले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको इच्छाको विरुद्ध बाहिर निस्कनुमा बाध्य गरी ठीक गरेनौं । अतः उनीहरूले भने हे रसूल सल्लल्लाहु अलैहि वसल्लम ! यदि तपाईं भित्र रही मुक़ाबिला गर्न ठान्नु हुन्छ, भने त भित्र नै रहौं । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि युद्धको पोशाक लगाइसके पश्चात कुनै नबीलाई उचित छैन कि अल्लाहको निर्णय बिना वापस होस् अथवा पोशाक फुकाओस् । अतः एक हजार मुसलमान युद्धका लागि निस्किहाले, तर जब यो सेनाको टुकडी शोत नामक ठाउँमा पुग्यो त्यसबेला अब्दुल्लाह बिन उबैय आफ्ना तीन सय साथीहरुका साथ यो भनेर फर्किहाले कि उसको सल्लाह मानिएन भने अनर्थ ज्यान दिनाले के लाभ ? त्यसको यस निर्णयबाट सामयिक रूपले केही मुसलमान पनि प्रभावित भइहाले र उनीहरूले पनि कमजोरीको प्रदर्शनी गरे । (इब्ने कसीर)

[2]यो औस र ख़जरजका दुई क़बीला (बनू हारिसा तथा बनू सलमा) थिए ।

أَنْ تَفْشَلَا ۙ وَاللَّهُ وَلِيُّهُمَا ۗ وَعَلَى اللَّهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُونَ ﴿١٢٢﴾

तिनको संरक्षक अल्लाह छ ।[1] र त्यसै अल्लाहमा मुसलमानहरूले विश्वास गर्नुपर्दछ ।

وَلَقَدْ نَصَرَكُمُ اللَّهُ بِبَدْرٍ وَأَنْتُمْ أَذِلَّةٌ ۖ فَاتَّقُوا اللَّهَ لَعَلَّكُمْ تَشْكُرُونَ ﴿١٢٣﴾

(१२३) र अल्लाहले बद्रको युद्धमा तिम्रो त्यसबेला सहायता गऱ्यो जबकि तिमी गिरेको स्थितिमा थियौ,[2] अत: अल्लाहसित तर्स ताकि कृतज्ञ बन ।

إِذْ تَقُولُ لِلْمُؤْمِنِينَ أَلَنْ يَكْفِيَكُمْ أَنْ يُمِدَّكُمْ رَبُّكُمْ بِثَلَاثَةِ آلَافٍ مِنَ الْمَلَائِكَةِ مُنْزَلِينَ ﴿١٢٤﴾

(१२४) जब तपाईं मुसलमानहरूलाई सान्त्वना दिइराख्नु भएको थियो, के तिमीलाई यो पर्याप्त हुनेछैन कि अल्लाह तीन हजार फरिश्ता अवतरित गरेर तिम्रो सहायता गरोस् ।

بَلَىٰ ۚ إِنْ تَصْبِرُوا وَتَتَّقُوا وَيَأْتُوكُمْ مِنْ فَوْرِهِمْ هَٰذَا يُمْدِدْكُمْ رَبُّكُمْ بِخَمْسَةِ آلَافٍ مِنَ الْمَلَائِكَةِ مُسَوِّمِينَ ﴿١٢٥﴾

(१२५) किन होइन ? यदि तिमी धैर्य र परहेजगारी गर्दछौ र यिनीहरू यसै क्षण तिम्रो पासमा आईपुग्छन् भने तिम्रो प्रभुले तिम्रो सहायता पाँच हजार फरिश्ताहरूबाट गर्नेछ ।[3] जो

[1]यसबाट ज्ञात भयो कि अल्लाहले उनीहरूको सहायता गऱ्यो र उनको दुर्बलतालाई हटाई उनलाई साहस प्रदान गऱ्यो ।

[2]संख्या र समाजको कमीको आधारमा, किनभने बद्रको युद्धमा मुसलमानहरूको संख्या तीन सय तेह्र र त्यो पनि बिना सामान, मात्र दुईटा घोडा र सत्तरी ऊट थिए, शेष सबै पैदल थिए । (इब्ने क़सीर)

[3]मुसलमान बद्रतिर कुरैशका क़ाफिला (समूहहरू) माथि जुन लगभग निहत्था थियो, छापा मार्न निस्केका थिए । तर बद्रसम्म पुग्दाखेरी यो ज्ञात भयो कि मक्काका मूर्तिपूजकहरूको एउटा ठूलो सेना आफ्ना क्रोध र दुस्साहसका साथ अगाडि बढ्दै आइराखेको छ । यो सुनेर मुसलमानहरूमा घबराहट र युद्ध गर्ने साहसको मिश्रित प्रभाव भयो र उनीहरूले प्रभुसित प्रार्थना गरे । यस पश्चात अल्लाह तआलाले पहिला एक हजार अनि तीन हजार फरिश्ताहरूको अवतरणको शुभ-सूचना दियो र यसको अतिरिक्त यो वचन पनि दियो कि यदि तिमी धैर्य र परहेजगारीमा दृढ रहे र मूर्तिपूजक त्यही क्रोधको स्थितिमा आइहाल्नेछन् भने यो संख्या पाँच हजार गरिहालिने छ । भनिन्छ कि मूर्तिपूजकहरूको त्यो साहस र क्रोध दृढ रहन सकेन । (बद्र पुग्नुभन्दा पहिले नै उनीहरूमा फुट परिहाल्यो र एक समूह मार्गबाटै मक्का

निशानधारी हुनेछन् ।[1]

وَمَا جَعَلَهُ اللّٰهُ اِلَّا بُشْرٰى لَكُمْ وَلِتَطْمَئِنَّ قُلُوْبُكُمْ بِهٖ ؕ وَمَا النَّصْرُ اِلَّا مِنْ عِنْدِ اللّٰهِ الْعَزِيْزِ الْحَكِيْمِ ۟ۙ

(१२६) तथा हामीले यसलाई तिम्रो लागि मात्र शुभ-सूचना एवं तिम्रा हृदयको सन्तोषको लागि बनायौं, नत्र सहायता त सर्वशक्तिमान ज्ञानी अल्लाहकै तर्फबाट हुन्छ ।

لِيَقْطَعَ طَرَفًا مِّنَ الَّذِيْنَ كَفَرُوْۤا اَوْ يَكْبِتَهُمْ فَيَنْقَلِبُوْا خَآئِبِيْنَ ۟

(१२७) (यस अल्लाहको सहायताको उद्देश्य यो थियो कि अल्लाह) मूर्तिपूजकहरूको एक समूहलाई काटिदेओस् अथवा अपमानित गरिदेओस् । र उनीहरू असफल भई फर्कून् ।[2]

फर्किहाल्यो, र शेष जो बद्रसम्म आए उनीहरूमध्ये अधिकतर नायकहरूको सल्लाह थियो कि युद्ध नगरियोस्) । यसकारण शुभ-सूचनाको अनुसार तीन हजार फरिश्ता उतारिए । र पाँच हजारको संख्या पूरा गर्नुका आवश्यकता रहेन । र भनिन्छ कि बरु यो संख्या पुरा गरियो ।

[1]अर्थात् पहिचानको लागि विशेष चिन्ह हुनेछन् ।

[2]यो अजेय एवं प्रभावशाली अल्लाहको सहायताको परिणाम भनिन्छ । सूरः अल-अंफ़ालमा फरिश्ताहरूको संख्या एक हजार भनिएको छ ।

﴿ إِذْ تَسْتَغِيثُونَ رَبَّكُمْ فَاسْتَجَابَ لَكُمْ أَنِّي مُمِدُّكُم بِأَلْفٍ مِّنَ الْمَلَائِكَةِ ﴾

"जब तिमी आफ्नो प्रभुसित गुहार माँगिराखेका थियौ, अल्लाह तआलाले तिम्रो विन्ती सुनेर भन्नुभयो कि एक हजार फरिश्ताहरूबाट तिम्रो सहायता गर्नेछु ।" (अल-अंफाल-९)

यसबाट ज्ञात भयो कि वास्तवमा फरिश्ताहरू एक हजार नै उत्रे । र मुसलमानहरूसित तीन हजार र पाँच हजारको प्रतिबन्धित वचन गरिएको थियो । अनि परिस्थितिहरूका कारण मुसलमानहरूको सान्त्वनाको दृष्टिले पनि तिनको आवश्यकता महसुस गरिएन यसकारण केही व्याख्याकारहरूका निकट यी तीन हजार र पाँच हजार फरिश्ता उत्रेनन्, उद्देश्य त साहस बढाउनु थियो, नत्र वास्तविक सहायक त अल्लाह तआला नै हो र त्यो आफ्नो सहायताको लागि फरिश्ताहरू अथवा कसैको अधीन छैन । अतः उसले मुसलमानहरूको सहायता गऱ्यो र बद्रको युद्धमा मुसलमानहरूलाई ऐतिहासिक विजय प्राप्त भयो । कुफ्रको शक्ति क्षीण भयो र काफ़िरहरूको गौरव समाप्त भयो । (ऐसरुत्तफ़ासीर)

لَيْسَ لَكَ مِنَ الْأَمْرِ شَيْءٌ أَوْ يَتُوبَ عَلَيْهِمْ أَوْ يُعَذِّبَهُمْ فَإِنَّهُمْ ظَٰلِمُونَ ﴿١٢٨﴾

(१२८) (हे पैग़म्बर !) तपाईंको वशमा केही छैन,[1] अल्लाह (तआ़ला) ले चाहेको अवस्थामा उनीहरूको क्षमा स्वीकार गर्नसक्छ ।[2] अथवा यातना दिनसक्छ, किनभने उनीहरू अत्याचारी हुन् ।

وَلِلَّهِ مَا فِي السَّمَٰوَٰتِ وَمَا فِي الْأَرْضِ ۚ يَغْفِرُ لِمَن يَشَاءُ وَيُعَذِّبُ مَن يَشَاءُ ۚ وَاللَّهُ غَفُورٌ رَّحِيمٌ ﴿١٢٩﴾

(१२९) आकाशहरु र धर्तीमा जे-जति छ, सबै अल्लाहकै हो । त्यसले जसलाई चाहन्छ क्षमा गर्दछ र जसलाई चाहन्छ यातना दिन्छ । र अल्लाह (तआ़ला) क्षमाशील कृपालु छ ।

يَٰٓأَيُّهَا الَّذِينَ آمَنُوا لَا تَأْكُلُوا الرِّبَوٰٓا أَضْعَٰفًا مُّضَٰعَفَةً ۖ وَاتَّقُوا اللَّهَ لَعَلَّكُمْ تُفْلِحُونَ ﴿١٣٠﴾

(१३०) हे निष्ठावानहरू ! बढोत्तरीको ध्ययले ब्याज नखाऊ जुन कैयौं गुना अधिक हुनसक्छ ।[3] र अल्लाह (तआ़ला) सित तर्स ताकि तिमीलाई मोक्ष प्राप्त होस् ।

[1]अर्थात् ती काफ़िरहरूलाई मार्गदर्शन दिनु अर्थात् उनीहरूको विषयमा कुनै प्रकारको निर्णय गर्नु अल्लाहको वशमा छ । हदीसमा छ कि उहुदको युद्धमा नबी सल्लल्लाहु अलैहि वसल्लमका दाँत पनि शहीद भए र मुख पनि घाइते भयो, तब उहाँले भन्नुभयो कि, "त्यो क़ौम कुन प्रकार सफल हुनेछ जसले आफ्नो नबीलाई घाइते गरिदियो ।" अर्थात उहाँले उनका मार्गदर्शनसित निराशा व्यक्त गर्नुभयो । यसमाथि यो आयत उत्र्यो । यसप्रकार केही कथनहरूमा भनिन्छ कि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले केही काफ़िरहरूको लागि कुनूते नाज़िल:को प्रबन्ध गर्नुभयो जसमा उनीहरूको लागि अभिशाप दिनुभयो । जसपश्चात यो आयत अल्लाह तआ़लाले उतार्‍यो । अत: उहाँले अभिशाप बन्द गरिदिनु भयो । (इब्ने क़सीर तथा फ़तहुल क़दीर) यस आयतबाट उनीहरूले शिक्षा लिनुपर्छ जो नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सर्वाधिकारी मान्दछन् कि उनलाई यति पनि अधिकार थिएन कि कसैलाई सत्यमार्गमा लगाउन सकून् । यद्यपि कि उहाँ मार्गतिर बोलाउनको लागि पठाउनु भएको थियो ।

[2]यो जाति जसको लागि अभिशाप गर्दैरहे अल्लाहले उनलाई मुसलमान बनाइदिए । जसबाट विदित भयो कि सबै एकाधिपति र परोक्षज्ञ अल्लाह छ ।

[3]किनकि उहुदको युद्धमा असफलता रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका आदेशहरूको पालना नगर्न र सांसारिक धनसित लोभको कारण भएको थियो । यसकारण अब संसारको लोभको सबभन्दा अधिक भयानक र स्थाई रूप ब्याजबाट मनाही गरिदैछ । र आज्ञा पालनमा जोड दिईदैछ । र बढाई-चढाई ब्याज नखाउको यो कदापि अर्थ होइन कि यदि साधारण ब्याज छ भने उचित छ । बरु ब्याज थोरै होस् अथवा धेरै एक्लो होस् या

وَاتَّقُوا النَّارَ الَّتِي أُعِدَّتْ لِلْكَافِرِينَ ﴿١٣١﴾

(१३१) र त्यस आगोसित तर्स जुन काफ़िरहरूको लागि तयार गरिएको छ ।

وَأَطِيعُوا اللَّهَ وَالرَّسُولَ لَعَلَّكُمْ تُرْحَمُونَ ﴿١٣٢﴾

(१३२) र अल्लाह र त्यसका रसूलको आदेशको पालना गर ताकि तिमीमाथि कृपा गरियोस् ।

وَسَارِعُوا إِلَىٰ مَغْفِرَةٍ مِّن رَّبِّكُمْ وَجَنَّةٍ عَرْضُهَا السَّمَاوَاتُ وَالْأَرْضُ أُعِدَّتْ لِلْمُتَّقِينَ ﴿١٣٣﴾

(१३३) र आफ्नो प्रभुको क्षमातिर र त्यस स्वर्गतिर दगुर[1] जसको चौडाई आसमानहरू र धर्तीको बराबर छ, जुन परहेजगारहरूका लागि तयार गरिएको छ ।

الَّذِينَ يُنفِقُونَ فِي السَّرَّاءِ وَالضَّرَّاءِ وَالْكَاظِمِينَ الْغَيْظَ وَالْعَافِينَ عَنِ النَّاسِ ۗ وَاللَّهُ

(१३४) जुन मानिसहरू सुविधामा र कठिनाईमा (पनि अल्लाहको मार्गमा) व्यय गर्दछन् ।[2] र क्रोध खप्छन् र मानिसहरूलाई क्षमा

मिश्रित कदापि अनुचित छ जस्तो कि अघिनै गुज़्रिसकेको छ । यो वर्जितको सीमाको लागि अनुवन्धन होइन, बरु परिस्थितिको कारण हो जुन त्यसबेला प्रचलित थियो त्यसको वर्णन तथा स्पष्टीकरण हो । अज्ञान कालमा ब्याजको यो प्रथा सामान्य थियो कि जब भुक्तानीको समय आउँथ्यो र भुक्तानी सम्भव हुँदैनथ्यो त समय वृद्धिको लागि ब्याजको दरमा बृद्धि हुँदै जान्थ्यो, जसबाट सानो मूलधन वृद्धि भई निकै धेरै भइहाल्थ्यो र एउटा सामान्य मानिसको लागि भुक्तानी गर्न असम्भव भइहाल्थ्यो । अल्लाह तआलाको आदेश भयो कि अल्लाहसित तर्स र त्यस आगोसित तर्स जुन काफ़िरहरूको लागि तयार गरिएको छ । जसबाट यो चेतावनी पनि छ कि यदि ब्याज लिनबाट रोकिएनौ भने यो कर्म तिमीलाई कुफ़्रसम्म पुऱ्याउन सक्छ, किनभने यस्तो गर्नु अल्लाह तथा त्यसको रसूलसित संघर्षको घोषणा हो ।

[1]धन-सम्पत्ति र सांसारिकताको पछि लागेर आख़िरत (परलोक) नष्ट गर्नुको सट्टा अल्लाह र रसूलका आदेशहरूको पालना गर र अल्लाहको क्षमा र त्यसको स्वर्गको मार्ग अपनाउ जुन आज्ञापालकहरूको लागि बनाइएको छ । यसकारण अगाडि आज्ञापालकहरूको केही विशेषताहरु भनिएका छन् ।

[2]अर्थात् मात्र सुखमा होइन, बरु दुखको बेलामा पनि व्यय गर्दछन् । तात्पर्य यो छ कि हर दशा र परिस्थितिमा अल्लाहको मार्गमा व्यय गर्दछन् ।

يُحِبُّ الْمُحْسِنِينَ ﴿١٣٤﴾

गर्दछन् ।[1] अल्लाह ती सत्कर्मीहरूलाई मित्र बनाउँछ ।

وَالَّذِينَ إِذَا فَعَلُوا فَاحِشَةً أَوْ ظَلَمُوا أَنْفُسَهُمْ ذَكَرُوا اللَّهَ فَاسْتَغْفَرُوا لِذُنُوبِهِمْ وَمَنْ يَغْفِرُ الذُّنُوبَ إِلَّا اللَّهُ وَلَمْ يُصِرُّوا عَلَىٰ مَا فَعَلُوا وَهُمْ يَعْلَمُونَ ﴿١٣٥﴾

(१३५) जब उनीहरूबाट कुनै असभ्य कार्य हुन्छ अथवा कुनै पाप गर्छन्, त शीघ्र नै अल्लाहको उपासना, र आफ्ना पापहरुको लागि क्षमा-याचना गर्दछन् ।[2] र वास्तवमा अल्लाह (तआ़ला) को अतिरिक्त पापहरुलाई कसले क्षमा गर्नसक्छ ? तथा उनीहरू जानी-जानी आफुले गरिएका कुरामा हठ गर्दैनन् ।

أُولَٰئِكَ جَزَاؤُهُمْ مَغْفِرَةٌ مِنْ رَبِّهِمْ وَجَنَّاتٌ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا وَنِعْمَ أَجْرُ الْعَامِلِينَ ﴿١٣٦﴾

(१३६) यिनैका प्रत्युपकार उनका पालनकर्ताको तर्फबाट क्षमा एवं बगैंचा छ, जसमा नहरहरू प्रवाहित रहन्छन् जसमा उनी सधैं निवास गर्नेछन् तथा सदाचारीहरूको यो कति उत्तम प्रतिफल हो ।

قَدْ خَلَتْ مِنْ قَبْلِكُمْ سُنَنٌ فَسِيرُوا فِي الْأَرْضِ فَانْظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِينَ ﴿١٣٧﴾

(१३७) तिमीभन्दा पहिलेदेखि नियम चलिआइराखेको छ, तिमी धर्तीमा यात्रा गर तथा हेर कि जो अल्लाहका आयतलाई मानेनन्, तिनीहरूको अन्त्य कस्तो भयो ?[3]

[1]अर्थात् जब उनीहरूलाई क्रोध आउँछ, त त्यसलाई पचाइहाल्छन्, अर्थात् क्रोध अनुसार काम गर्दैनन् र उनीहरूलाई क्षमा गरिदिन्छन्, जो उनीहरूसित अहित गर्दछन् ।

[2]अर्थात् उनीहरू मनुष्य भएका कारण जब उनीबाट कुनै पाप अथवा गल्ती हुन्छ त तुरुन्त क्षमा-याचना गर्दछन् ।

[3]उहुदको युद्धमा मुसलमानहरूको सेनाको संख्या सात सय थियो, जसमा पचास धनुषधरहरूको एक दल थियो, उहाँले अब्दुल्लाह बिन जुबैरको नेतृत्वमा त्यसलाई एउटा पर्वतमा नियुक्त गरिदिएर सावधान गरे कि चाहे हाम्रो विजय होस् या पराजय, तिमी यहाँबाट नहल्लिनु तथा तिम्रो काम यो हो कि जुन घोडा सवार तिमीतिर आउँछ, त्यसलाई बाँड्ले पछाडी धकेलिदिनु तर जब मुसलमान विजयी भए तथा धन सामान एकत्र गर्नथाले तब यस दलमा विभेद भयो, केही मानिसहरु भन्नलागे

(१३८) यो मानव जातिको लागि एउटा वर्णन तथा संयमीहरूका लागि मार्गदर्शन एवं शिक्षा हो ।

هَٰذَا بَيَانٌ لِّلنَّاسِ وَهُدًى وَمَوْعِظَةٌ لِّلْمُتَّقِينَ ﴿١٣٨﴾

(१३९) तिमी साहस नगुमाउ, न चिन्ता गर, यदि तिमी ईमान्दार हौ भने तिमी नै विजयी हुनेछौ ।[2]

وَلَا تَهِنُوا وَلَا تَحْزَنُوا وَأَنتُمُ الْأَعْلَوْنَ إِن كُنتُم مُّؤْمِنِينَ ﴿١٣٩﴾

(१४०) (यस युद्धमा) यदि तिमी घाइते भएका छौ भने उनीहरू पनि (बद्रको युद्धमा) यसैप्रकार घाइते भएका छन् तथा यी दिनहरूलाई हामी मानिसहरू बीच परिवर्तित गरिरहन्छौं[1] ताकि अल्लाह निष्ठावानहरूलाई (अलग्ग पारी) हेर्न सकोस तथा तिमीमध्य

إِن يَمْسَسْكُمْ قَرْحٌ فَقَدْ مَسَّ الْقَوْمَ قَرْحٌ مِّثْلُهُ ۚ وَتِلْكَ الْأَيَّامُ نُدَاوِلُهَا بَيْنَ النَّاسِ وَلِيَعْلَمَ اللَّهُ الَّذِينَ آمَنُوا وَيَتَّخِذَ مِنكُمْ شُهَدَاءَ ۗ

कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको आदेशको प्रयोजन यो थियो कि लडाईं भइराखेको छ भने यहाँ अडिग रहनु किन्तु जब लडाईं समाप्त भइहाल्यो तथा मिश्रणवादी भागिराखेका छन् त यहाँ रहनु अनिवार्य छैन र उनीहरू पनि त्यहाँबाट हटेर धन सामग्री एकत्रित गर्न आरम्भ गरिहाले तथा त्यहाँ रसूल सल्लल्लाहु अलैहि वसल्लमको आज्ञा पालना गर्न केवल दस जना शेष बचे । जसको लाभ काफिरहरूले लिइहाले र उनीहरूका घोडसवारहरूले फर्कि यहींबाट मुसलमानहरूलाई पछाडीबाट प्रहार गरिदिए । जसबाट छरिए तथा यस अकस्मात कडा प्रहारबाट मुसलमान अति व्याकूल भइहाले । परिणाम यो भयो कि सत्तरी मुसलमान मारिए, तथा धेरेजसो आहत भए जसबाट मुसलमानहरूलाई स्वभाविक रुपले वडो दुख भयो । यी आयतमा अल्लाह (परमेश्वर) मुसलमानहरूलाई सान्त्वना दिइराखेको छ कि तिमीलाई जे-जति भएको छ, कुनै नयाँ कुरो होइन, पहिलाका रसूल (ईशदूत) का निवर्तिहरूको पनि यस्तै दशा भएको थियो ।

[1]विगत युद्धमा तिमीलाई जुन हानि भएको छ त्यसको कारण न आलस्य गर न त्यसमाथि क्षोभ गर किनभने यदि तिमीमा विश्वासको भावना जागृत रहयो भने, विजयी एवं सफल तिमी नै हुनेछौ । यसमा अल्लाहले मुसलमानहरूलाई बलको मूल भेद तथा उनको सफलताको आधार भनिदिएको छ र वास्तविकता यो छ कि यस पश्चात मुसलमान प्रत्येक रणक्षेत्रमा सफल रहे ।

[2]एक अरु प्रकारले मुसलमानहरूलाई तसल्ली (सान्त्वना) दिइँदैछ कि यदि उहुदमा तिम्रा केही मानिसहरू घाइते भएका छन् भने के भयो ? तिम्रा विरोधी पनि त बद्रको रणमा तथा उहुदको आरम्भमा यसैप्रकार आहत भैसकेका छन् तथा अल्लाहको रीति हो कि त्यो विजय पराजयका दिनहरु परिवर्तित गरिराख्छ । कहिले विजितलाई पराजित कहिले पराजितलाई विजित गरिदिन्छन् ।

وَاللّٰهُ لَا يُحِبُّ الظّٰلِمِيْنَ ﴿١٤٠﴾

केहीलाई शहीद बनाइदिन्छ, तथा अल्लाह अत्याचारीहरूसित प्रेम गर्दैन ।

وَلِيُمَحِّصَ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا وَيَمْحَقَ الْكٰفِرِيْنَ ﴿١٤١﴾

(१४१) र ताकि अल्लाह मोमिनहरूलाई अलग्ग गरोस् तथा अविश्वासीहरूका सत्यानाश गरिदेओस् ।[1]

اَمْ حَسِبْتُمْ اَنْ تَدْخُلُوا الْجَنَّةَ وَلَمَّا يَعْلَمِ اللّٰهُ الَّذِيْنَ جٰهَدُوْا مِنْكُمْ

(१४२) के तिमीले ठानेका छौ कि स्वर्गमा यसै प्रवेश गर्नेछौ[2] जबकि अहिले अल्लाहले यो

---

[1]उहुदमा मुसलमानहरूलाई जुन सामयिक पराजय भयो, त्यो उनको आफ्नो आलस्यको कारण भयो, यसमा पनि भविष्यका लागि कैयन् राम्रा कुरा छन्, जसको वर्णन अगाडी अल्लाह तआला गरिराखेको छ । एक यो कि अल्लाह ईमानवालाहरूलाई जानिहालोस् (किनभने धैर्य तथा स्थिरता ईमानको अभियावन हो) युद्धका कठिनाइ एवं आपदाहरूमा जसले धैर्य एवं स्थिरता देखायो, ती सबै मोमिन (विश्वासयुक्त) हुन् । दोस्रो यो कि केहीलाई शहादत पदमा पदासीन गरिदेओस्, तेस्रो यो कि ईमानवालाहरूलाई पापहरुबाट स्वच्छ गरिदेओस् । تَمْحِيص (तम्हीस) को एक अर्थ निर्वाचित गरिहाल्नुसित लिइएको छ तथा एक अर्थ पवित्र गर्नु एवं एक अर्थ मुक्त गर्नु हो । अन्तिम दुबैको अभिप्राय पापहरुबाट शुद्धि एवं मुक्ति हो (फ़तहुल क़दीर) अनुवादकले प्रथम अर्थ लिएको छ । चौथो यो कि काफिरहरू (अधर्मी) लाई मिटाइदेओस्, किनभने यसैप्रकार सामयिक विजयबाट उनको दुष्टता एवं अहङ्कार बढ्नेछ जुन उनको विनाशको कारण बन्नेछ ।

[2]अर्थात् विना लडी तथा विना कडा परीक्षा तिमी स्वर्गमा गईहाल्नेछौ ? होइन स्वर्ग उनीहरूलाई प्राप्त हुनेछ जो परीक्षामा पूरा ओर्लन्छन् जस्तो कि अन्य स्थानमा भनिएको छ ।

﴿ أَمْ حَسِبْتُمْ أَن تَدْخُلُوا الْجَنَّةَ وَلَمَّا يَأْتِكُم مَّثَلُ الَّذِينَ خَلَوْا مِن قَبْلِكُم مَّسَّتْهُمُ الْبَأْسَاءُ وَالضَّرَّاءُ وَزُلْزِلُوا ﴾

"के तिमीले सोचेका छौ कि स्वर्गमा गईहाल्नेछौ र अहिले तिमीमाथि त्यो दशा आएको छैन जुन पूर्वका मानिसहरूमाथि आयो, उनीहरूलाई दरिद्रता तथा दुःख पुग्यो र खूब हल्लाइए ।" (सूरः बक़रः-२१४)

यो पनि भनियो ।

﴿ أَحَسِبَ النَّاسُ أَن يُتْرَكُوا أَن يَقُولُوا آمَنَّا وَهُمْ لَا يُفْتَنُونَ ﴾

"के मानिसहरू यस भ्रममा छन् कि मात्र हामी ईमान ल्यायौं भनेपछि त्यागिनेछन् कि उनीहरूको परीक्षा लिइने छैन । (अल-अन्कबूत-२)

وَيَعْلَمَ الصّٰبِرِيْنَ ﴿١٤٢﴾

देखेको छैन कि तिमीहरूमध्येको धर्मयुद्ध (जिहाद) गर्दछन् र को धैर्य राख्दछन् ।[1]

وَلَقَدْ كُنْتُمْ تَمَنَّوْنَ الْمَوْتَ مِنْ قَبْلِ اَنْ تَلْقَوْهُ فَقَدْ رَاَيْتُمُوْهُ وَاَنْتُمْ تَنْظُرُوْنَ ﴿١٤٣﴾

(१४३) यसभन्दा पूर्व तिमी मृत्युको कामना गर्दथ्यौ,[2] अब त तिमीले त्यसलाई आँखाले देखिहाल्यौ ।[3]

وَمَا مُحَمَّدٌ اِلَّا رَسُوْلٌ ۚ قَدْ خَلَتْ مِنْ قَبْلِهِ الرُّسُلُ ۗ اَفَا۟ئِنْ مَّاتَ اَوْ قُتِلَ انْقَلَبْتُمْ عَلٰٓى اَعْقَابِكُمْ ۗ وَمَنْ يَّنْقَلِبْ عَلٰى عَقِبَيْهِ فَلَنْ

(१४४) तथा मुहम्मद त मात्र एक ईशदूत हुन्,[4] यसभन्दा पूर्व धेरै ईशदूत गुज्रिसकेका छन्, त यदि उनीहरू मर्छन् अथवा मारिन्छन् त के तिमी (इस्लाम) बाट कुरकुच्चाले टेकी फर्कनेछौ र जो कोही विमुख हुनेछ ।

[1]यो विषय सूरः बक़रःमा आइसकेको छ, तर प्रसँगले सम्बन्धको कारण यहाँ पुनः भनिदैछ कि स्वर्गमा प्रवेश यसै प्राप्त हुनेछैन, यसको निम्ति तिमीले अग्नि परीक्षाबाट गुज्रनु पर्छ तथा रणक्षेत्रमा परीक्षा लिइनेछ कि त्यहाँ तिमी शत्रुहरूको समूहमा घेरिसकिएपछि साहस एवं सहनशीलता तथा स्थिरता देखाउँछौ अथवा देखाउन्नौ ?

[2]यो संकेत ती सहावा (सहचरहरू) तिर छ जो बद्रको रणमा भाग लिन सकेनन्, यसकारण उनी वंचनाको एउटा संवेदन राख्दथे तथा चाहन्थे कि लडाईं भएको अवस्थामा उनीहरू पनि काफिरहरूसित लडेर धर्मयुद्धको उत्तेजनामा मदीनाबाट बाहिर निस्कि लड्न परामर्श दिएका थिए, तर जब मुसलमानहरूको विजय काफिरहरूको एक्कासि प्रहारबाट पराजयमा परिणत भइहाल्दा यी उत्तेजित मुजाहिद्दीन व्याकुल भइहाले तथा भाग्नथाले जस्तो कि यसको विवरण अगाडी आइराखेको छ, तथा निकै थोरै अडिग रहे, (फ़तहुल क़दीर) यसैकारण हदीसमा वर्णन आउँछ कि "शत्रुसित भिडन्त" को कामना नगर तथा अल्लाहसित शान्तिको प्रार्थना गर, तर यदि स्वयं परिस्थिति यस्तो बनिहालोस् कि तिमीले शत्रुसित लड्न परोस् त फेरि अडिग रह तथा यो कुरो जानीहाल कि स्वर्ग तरवारहरुको छायाँमुनि छ । (सहीहैन, उधृत इब्ने क़सीर)

[3](رأيتموه) तथा (تنظرون) पर्यायवाची हुन्, जुन जोड दिनलाई दुई शब्द प्रयोग गरिएका छन् अर्थात् तरवारहरुको चमक, तीरहरूको वर्षा तथा वीरहरूको पंक्तिहरूमा तिमीले मृत्युलाई राम्ररी देखिहाल्यौ (इब्ने कसीर व फ़तहुल क़दीर)

[4]मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम मात्र रसूल (ईशदूत) नै हुन् अर्थात् उनको विशेषता पनि दूतत्व हो, यो होइन कि उनी मानवीय विशेषताहरूभन्दा उच्च एवं ईश्वरीय गुणहरूबाट युक्त छन् कि उनलाई मृत्युको सामना गर्न नपरोस् ।

يَضُرَّ اللهَ شَيْـًٔا وَسَيَجْزِي اللهُ الشّٰكِرِيْنَ ﴿١٤٤﴾

त त्यो अल्लाहलाई कुनै क्षति पुऱ्याउन सक्ने छैन,[१] तथा अल्लाह कृतज्ञहरूलाई शीघ्र प्रतिफल दिनेछ ।[२]

وَمَا كَانَ لِنَفْسٍ اَنْ تَمُوْتَ اِلَّا بِاِذْنِ اللهِ كِتٰبًا مُّؤَجَّلًا وَمَنْ يُّرِدْ ثَوَابَ الدُّنْيَا نُؤْتِهٖ مِنْهَا وَمَنْ يُّرِدْ ثَوَابَ الْاٰخِرَةِ نُؤْتِهٖ مِنْهَا وَسَنَجْزِي الشّٰكِرِيْنَ ﴿١٤٥﴾

(१४५) र अल्लाहको आदेशबिना कुनै जीव मर्न सक्दैन । निर्धारित समय लेखिएको छ । संसारसित प्रेम गर्नेहरूलाई हामी केही संसार प्रदान गर्दछौं र आखिरतका पुण्य चाहनेहरूलाई हामीले त्यो पनि प्रदान गर्नेछौं ।[३] र कृतज्ञता व्यक्त गर्नेलाई हामीले शीघ्र नै राम्रो प्रतिफल दिनेछौं ।

[१]उहुदको पराजयको एउटा कारण यो पनि थियो कि नबी सल्लल्लाहु अलैहि वसल्लमको सन्दर्भमा काफिरहरूले यो झुठा कुरा फैलाइदिए कि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) हत गरिदिइएका छन्, मुसलमानहरूमा जब यो खबर फैलियो त यसबाट केही मुसलमान साहसहीन भई लडाईबाट पछि हटिहाले, त्यसपश्चात यो आयत उत्र्यो कि नबीको हत भईहाल्नु अथवा त्यसमाथि मृत्यु आइहाल्नु कुनै नयाँ कुरो त होइन । अतीतमा पनि नबीहरू हत एवं मृत्युसित आलिंगित भएका छन् । यदि मानि पनि हालौं कि तपाइं यसबाट मानसिक रुपले खलबलिए पनि के तिमी त्यस धर्मबाट नै विमुख भइहाल्नेछौ, याद राख कि जो विमुख हुनेछ, त्यो स्वयं आफ्नो नोक्सानी गर्नेछ अल्लाहको केही विगार्न सक्ने छैन । नबी (सल्लल्लाहु अलैहि वसल्लम) को निधनको घटनाको समय जब आदरणीय उमर (रजी अल्लाहु अन्हु) अति भावुक भई नबीको निधनलाई नकारिराखेको थिए, तब आदरणीय अबू-बक्र (रजी अल्लाहु अन्हु) अति सावधानीले काम लिंदै रसूल (ईशदूत) को धर्ममञ्चको एकातिर उभिए तथा यही आयत पढे, जसबाट आदरणीय उमर पनि प्रभावित भए एवं उनलाई लाग्यो कि यो आयत भर्खरै उत्रेको हो ।

[२]अर्थात् युद्धमा डटिरहनेवालालाई जसले धैर्य र बहादुरीको प्रदर्शन गरी अल्लाहप्रति कृतज्ञता प्रकट गरे ।

[३]यो क्षीणता र कायरताका प्रदर्शन गर्नेवालाहरूको साहस बढाउनको निम्ति भनिदैछ कि मृत्यु त आफ्नो समयमा आएर नै छाड्नेछ । अनि भाग्न तथा कायरता देखाउनबाट के लाभ छ ? यसैप्रकार मात्र संसार माँगनबाट केही संसार त पाईन्छ, परन्तु आखिरतमा केही पाइने छैन, परन्तु यसको विपरीत आखिरत माग्नेवालाहरूलाई आखिरतको सबैकुरो प्राप्त हुनेछ, संसार पनि अल्लाह तआला उनीहरूलाई प्रदान गर्दछ । अगाडी केही अरु साहस

وَكَأَيِّن مِّن نَّبِيٍّ قَٰتَلَ مَعَهُۥ رِبِّيُّونَ كَثِيرٌ فَمَا وَهَنُوا لِمَا أَصَابَهُمْ فِي سَبِيلِ اللَّهِ وَمَا ضَعُفُوا وَمَا اسْتَكَانُوا وَاللَّهُ يُحِبُّ الصَّٰبِرِينَ ﴿١٤٦﴾

(१४६) र धेरैजसो नबीहरुसँग कैयन् अल्लाहका भक्तहरूले धर्मयुद्ध गरिसकेका छन्, उनीहरूलाई पनि अल्लाहको मार्गमा दुख पुग्यो, तर उनीहरूले न त साहस गुमाए न अल्छी नै रहे र न प्रभावित भए र अल्लाह धैर्य राख्नेहरूलाई नै रुचाउँछ ।[1]

وَمَا كَانَ قَوْلَهُمْ إِلَّا أَن قَالُوا رَبَّنَا اغْفِرْ لَنَا ذُنُوبَنَا وَإِسْرَافَنَا فِي أَمْرِنَا وَثَبِّتْ أَقْدَامَنَا وَانصُرْنَا عَلَى الْقَوْمِ الْكَٰفِرِينَ ﴿١٤٧﴾

(१४७) र उनीहरू यो पनि भनिराखे कि हे प्रभु ! हाम्रा पापहरुलाई क्षमा गरिदेउ र हामीबाट हाम्रा कामहरुमा अकारण ज्यादती भएको छ भने त्यसलाई माफ गर र हामीलाई दृढता प्रदान गर र हामीलाई काफ़िरहरूको कौमसँग संघर्षमा सहायता प्रदान गर ।

فَآتَاهُمُ اللَّهُ ثَوَابَ الدُّنْيَا وَحُسْنَ ثَوَابِ الْآخِرَةِ وَاللَّهُ يُحِبُّ الْمُحْسِنِينَ ﴿١٤٨﴾

(१४८) अल्लाह तआलाले उनीहरूलाई संसारको पुण्य प्रदान गर्‍यो र आख़िरतको पुण्यको विशेषता पनि प्रदान गर्‍यो र अल्लाह तआला सत्कर्मीहरूलाई प्रेम गर्दछ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِن تُطِيعُوا الَّذِينَ كَفَرُوا يَرُدُّوكُمْ عَلَىٰ أَعْقَابِكُمْ فَتَنقَلِبُوا خَٰسِرِينَ ﴿١٤٩﴾

(१४९) हे निष्ठावानहरू ! यदि तिमी काफ़िरहरूको कुरा मान्नेछौ भने उनी तिमीलाई विमुख गराई फर्काइदिने छन् (अर्थात तिमीलाई मूर्तद्द (धर्मभ्रष्ट) बनाइदिनेछन्) अनि तिमी नोक्सानीमा पर्नेछौ ।

بَلِ اللَّهُ مَوْلَىٰكُمْ وَهُوَ خَيْرُ النَّٰصِرِينَ ﴿١٥٠﴾

(१५०) बरु अल्लाह (तआला) तिम्रो स्वामी छ र त्यही श्रेष्ठ सहायक छ ।[2]

बढाउन र सान्त्वनाको लागि पछिल्ला नबीहरू उनका अनुयायीहरूको धैर्य र दृढताको उदाहरण दिईदैछ ।

[1]अर्थात् उनीहरूलाई जो युद्धको तीव्रतामा साहस गुमाउँदैनन् र दुर्बलता एवं क्षीणताको प्रदर्शन गर्दैनन् ।

[2]यो विषय पहिले पनि गुज्रिसकेको छ । यहाँ पुन: पुनरावृत्ति भइराखेको छ किनभने उहुदमा पराजयबाट लाभ लिएर केही काफ़िर अथवा मुनाफ़िक मुसलमानहरूलाई यो परामर्श दिँदैरहे कि तिमी आफ्ना पूर्वजहरुको धर्मतिर फर्किहाल ।

سَنُلْقِي فِي قُلُوبِ الَّذِينَ كَفَرُوا الرُّعْبَ بِمَا أَشْرَكُوا بِاللَّهِ مَا لَمْ يُنَزِّلْ بِهِ سُلْطَانًا ۖ وَمَأْوَاهُمُ النَّارُ ۚ وَبِئْسَ مَثْوَى الظَّالِمِينَ ﴿١٥١﴾

(१५१) हामी निकट भविष्यमा अस्वीकार गर्नेहरूका हृदयमा भय पारिदिनेछौं, यसकारण कि उनीहरू अल्लाहसँग ती कुराको साभ्छी ठहराउँछन्, जसको कुनै तर्क अल्लाहले अवतरित गरेको छैन ।[1] उनीहरूको वासस्थान नरक हो, र ती अत्याचारीहरूको नराम्रो ठाउँ हो।

وَلَقَدْ صَدَقَكُمُ اللَّهُ وَعْدَهُ إِذْ تَحُسُّونَهُم بِإِذْنِهِ ۖ حَتَّىٰ إِذَا فَشِلْتُمْ وَتَنَازَعْتُمْ فِي الْأَمْرِ

(१५२) र अल्लाह (तआला) ले आफ्नो वचन साँचो गरेर देखायो जबकि तिमी त्यसको आदेशले उनीहरूलाई समाप्त गरिराखेका थियौ ।[2] यहाँसम्मकि जब तिमी

यस्तोमा मुसलमानहरूलाई भनिंदैछ कि काफिरहरूको परामर्शको पालना गर्नु पनि तिम्रो बर्बादी र हानिको कारण हो । सफलता अल्लाहका आदेशहरूकै पालनामा नै छ र त्यसभन्दा श्रेष्ठ कोही सहायक छैन ।

[1]मुसलमानहरूको पराजय हेर्दा काफिरहरूका हृदयमा यो विचार आयो कि यो मुसलमानहरूको धर्मभ्रष्ट गर्नुको राम्रो अवसर हो । यस अवसरमा अल्लाह तआलाले उनीहरूका हृदयमा मुसलमानहरूको भय बसालिदियो, अनि उनीहरूलाई आफ्ना यस विचारलाई क्रियान्वित गर्ने साहस रहेन । (फ़तहुल क़दीर) सहीहैनको हदीसमा छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि मलाई यस्ता पाँच कुराहरू प्रदान गरिएका छन्, जुन मभन्दा पूर्व कुनै नबीलाई प्रदान गरिएको छैन, तिनीहरूमध्ये एउटा यो हो कि (نصرت بالرعب مسيرة شهر) “शत्रुको हृदयमा एक महिनाको दुरीसम्म मेरो भय बसालेर, मेरो सहायता गरिएको छ ।”

यस हदीसबाट ज्ञात भयो कि उहाँ सल्लल्लाहु अलैहि वसल्लमको भय स्थाई रूपले शत्रुहरूका हृदयमा पारियो । यस आयतबाट ज्ञात हुन्छ कि उहाँ सल्लल्लाहु अलैहि वसल्लमका साथ उहाँको उम्मत अर्थात् मुसलमानहरूको पनि भय मूर्तिपूजकहरूका हृदयमा पारिदिइएको छ, यसको कारण उनीहरूको शिर्क हो । अर्थात मूर्तिपूजकहरूको हृदय अरुहरूको भयले कामिरहन्छ, शायद यही कारण हो कि मुसलमानहरूको एक ठूलो संख्या मूर्तिपूजकहरूको जस्तै विश्वास र कर्मको कारण नै शत्रु उनीहरूसित भयभीत हुनुको सट्टा उनी शत्रुहरूसित भयभीत छन् ।

[2]यस वचनबाट केही व्याख्याकारहरूले तीन हजार र पाँच हजार फरिश्ताहरूको अवतरण भावार्थको रुपमा लिएका छन् । तर यो विचार उचित छैन, बरु सत्य त यो छ कि फरिश्ताहरूको अवतरण मात्र बद्रको युद्धसँग विशेषरुपले सम्बन्धित थियो । बाँकी रहे त्यो वाचा जुन यस आयतमा वर्णित गरिएको छ, त्यसबाट तात्पर्य विजयको त्यो सामान्य वादा हो जुन मुसलमानहरुको लागि र त्यसको रसूलको तर्फबाट

وَعَصَيْتُم مِّنۢ بَعْدِ مَآ أَرَىٰكُم مَّا تُحِبُّونَ ۚ مِنكُم مَّن يُرِيدُ ٱلدُّنْيَا وَمِنكُم مَّن يُرِيدُ ٱلْـَٔاخِرَةَ ۚ ثُمَّ صَرَفَكُمْ عَنْهُمْ لِيَبْتَلِيَكُمْ ۖ وَلَقَدْ عَفَا عَنكُمْ ۗ وَٱللَّهُ ذُو فَضْلٍ عَلَى ٱلْمُؤْمِنِينَ ﴿١٥٢﴾

आफ्नो साहस गुमाइराखेका थियौ र काममा विवाद गर्न थाल्यौ । र अवज्ञा गर्‍यौ,[1] त्यसपश्चात त्यसले तिमीलाई प्रिय कुरा देखायो ।[2] तिमीमध्ये केही संसार चाहन्थे ।[3] र केहीको आखि़रतको इच्छा थियो ।[4] पुनः त्यसले तिमीहरूलाई उनीबाट हटाइदियो ताकि तिम्रो परीक्षा गरोस् ।[5] र अवश्य त्यसले तिम्रा विचलनलाई क्षमा गरिदियो र निष्ठावानहरूमाथि अल्लाह (तआ़ला) अति कृपालु छ ।[6]

निकै पहिले गरिसकिएको थियो । यहाँसम्मकि केही आयतहरू मक्कामा अवतरित भइसकेका थिए र त्यसका अनुसार प्रारम्भमा मुसलमान प्रभावशाली तथा विजयी रहे । जसतिर ﴿إِذْ تَحُسُّونَهُم بِإِذْنِهِۦ﴾ बाट संकेत गरिएको छ ।

[1]यस तनाव र अवज्ञाकारिताबाट तात्पर्य ५० धनुर्धारीको त्यो मतभेद हो, जुन विजय तथा प्रभाव देखेर उनीहरूभित्र उत्पन्न भयो र जसको कारण काफ़िरहरूलाई पुनः फर्केर आक्रमण गर्न समय प्राप्त भइहाल्यो ।

[2]यसबाट तात्पर्य त्यो विजय हो जुन प्रारम्भमा मुसलमानहरूलाई प्राप्त भयो ।

[3]अर्थात् युद्धको परिहार, जसको लागि उनीहरूले डाँडा छाडिदिए, जसलाई नछोड्न उनीहरूलाई विशेषरूपले भनिएको थियो ।

[4]यी ती मानिसहरू हुन्, जसले मोर्चा छोड्नबाट मनाही गरे र नबी सल्लल्लाहु अलैहि वसल्लमको आदेशानुसार त्यसै स्थानमा दृढतापूर्वक डटिरहने प्रयत्न गरे ।

[5]अर्थात् विजय दिइसके पश्चात फेरि तिमीलाई पराजय दिएर ती काफ़िरहरूबाट विमुख गरिदियो ताकि तिम्रो परीक्षा लिन सकियोस् ।

[6]यसमा सहाबा किराम रिज़वानुल्लाह अलैहिम अज़मईनको त्यस विशेषता तथा श्रेष्ठताको वर्णन छ, जुन उनीहरूका कमीहरूका बावजूद पनि अल्लाहले उनीमथि आदेश गर्‍यो अर्थात् उनीहरूका गल्तीहरुको स्पष्टीकरण गरी कि भविष्यमा यस्तो नगरुन्, अल्लाहले उनीहरूको लागि क्षमा घोषित गरिदियो ताकि कुनै दुर्भाषी उनीमथि लाञ्छना लगाउन नसकोस् । जब अल्लाह तआ़लाले नै क़ुरआन करीममा उनीहरूको लागि सामान्य क्षमा घोषित गरिदियो, त अब कसैलाई कलंकित अथवा लान्छना लगाउने कुनै अवसर कहाँ रहयो र ? सहीह बुखा़रीमा एक

إِذْ تُصْعِدُونَ وَلَا تَلْوُونَ عَلَىٰ أَحَدٍ وَالرَّسُولُ يَدْعُوكُمْ فِي أُخْرَاكُمْ فَأَثَابَكُمْ غَمًّا بِغَمٍّ لِكَيْلَا تَحْزَنُوا عَلَىٰ مَا فَاتَكُمْ وَلَا مَا أَصَابَكُمْ ۗ وَاللَّهُ خَبِيرٌ بِمَا تَعْمَلُونَ ﴿١٥٣﴾

(१५३) जबकि तिमीमाथि उक्लिदैं गइराखेका थियौं[1] कसैतिर ध्यानसम्म पनि दिइराखेका थिएनौ र अल्लाहका रसूलले तिमीलाई पुकारिराखेका थिए ।[2] तिमीलाई एक दुखपछि अर्को दुख पुग्यो[3] ताकि तिमी आफ्नो गुमिएको (विजय) माथि शोक नगर र न त्यस (आघात) माथि जुन तिमीलाई पुग्यो[4] र अल्लाह

घटनाको वर्णन छ कि एक हज्जको अवसरमा एउटा व्यक्तिले आदरणीय उस्मान (रज़ी अल्लाह अन्हु) माथि केही आक्षेप लगायो कि उनी बद्रको युद्धमा तथा वैएत-रिज़वाँनमा सम्मिलित भएनन् । र उहुदको युद्धको दिन भाग लिएका थिए । आदरणीय इब्ने उमर (रजी अल्लाह अन्हुमा) ले भन्नुभयो कि बद्रको युद्धमा उनकी पत्नी (रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमकी पुत्री) बिरामी थिइन्, वैएत-रिजवाँनको अवसरमा उहाँ रसूलुल्लाह सल्लल्लाहु वसल्लमको दूत बनी मक्का गएका थिए (उनैको मृत्युको संभावित सूचना पाएर नै त मुसलमानहरूले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको हातमा बैअत गरेका थिए, जसको नाम वैएत-रिज़वाँ छ) र उहुदको दिनको भगदडलाई अल्लाहले क्षमा गरिदिएको छ । (संक्षिप्तरूपले सहीह बुखारी, गज़वः उहुद)

[1]काफ़िरहरूको असम्भावित एक्कासि आक्रमणको कारण मुसलमानहरूमा जुन भगदड मच्चिएको थियो र मुसलमानहरूको बहुमत भागिसकेको थियो । यहाँ त्यसको चित्रण गरिदैछ (تصعدون) शब्द (اصعاد) बाट उत्पन्न भएको छ, जसको अर्थ आफ्नो गतिले भागिहाल्नु, अथवा घाटीतिर उक्लिनु अथवा भाग्नु हो । (तबरी)

[2]नबी सल्लल्लाहु अलैहि वसल्लम आफ्ना केही साथीहरूसँग पछाडी परिहाल्नु भयो र मुसलमानहरूलाई पुकार्दै रहनुभयो ! (إليّ عباد الله !إليّ عباد الله !) "अल्लाहका भक्तहरू ! मतिर फर्केर आउ, अल्लाहका भक्तहरू ! मतिर फर्केर आउ ।" तर भगदडको यस अवस्थामा को सुन्थ्यो ?

[3](فأثابكم) तिम्रा आलस्यको परिणाम स्वरुप तिमीलाई दुखमाथि दुख दिइयो । इब्ने ज़रीर र इब्ने कसीरद्वारा प्रयुक्त कथनानुसार पहिलो दुखबाट तात्पर्य युद्धमा एकत्रित धन र काफ़िरहरूमाथि विजयबाट वञ्चित हुनु र दोस्रो दुखबाट तात्पर्य छ मुसलमानहरूको शहादत, उनी घायल हुनु, नबी सल्लल्लाहु अलैहि वसल्लमका आदेशहरुको अवहेलना तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको शहादतको समाचारमाथि दुख ।

[4]अर्थात् यो दुखमाथि दुख यसकारण दिइयो ताकि तिमीमा दुख सहन गर्ने शक्ति र दृढ निश्चय तथा साहस उत्पन्न होस् । जब यो शक्ति र साहस पैदा भइहाल्छ, त

(तआ़ला) तिम्रा सम्पूर्ण क्रियाकलापहरू जान्दछ ।

(१५४) अनि त्यस दुख पश्चात तिमीलाई शान्ति उतान्यो र तिमीमध्ये एउटा समूहलाई शान्तिको निद्रा लाग्न थाल्यो ।[1] र हो, केही त्यसमा ती मानिसहरू पनि थिए जसलाई आफ्ना ज्यानको चिन्ता थियो ।[2] उनी अल्लाह़ तआ़ला प्रति अनुचित मूर्खता जस्तो कुविचार गर्नथाले ।[3] र भने कि हामीलाई पनि केही अधिकार छ[4]। तपाईं भनिदिनुस् कि सम्पूर्ण काम अल्लाहको वशमा छ ।[5]

ثُمَّ اَنْزَلَ عَلَيْكُمْ مِّنْۢ بَعْدِ الْغَمِّ اَمَنَةً نُّعَاسًا يَّغْشٰى طَآئِفَةً مِّنْكُمْ ۙ وَطَآئِفَةٌ قَدْ اَهَمَّتْهُمْ اَنْفُسُهُمْ يَظُنُّوْنَ بِاللّٰهِ غَيْرَ الْحَقِّ ظَنَّ الْجَاهِلِيَّةِ ؕ يَقُوْلُوْنَ هَلْ لَّنَا مِنَ الْاَمْرِ مِنْ شَيْءٍ ؕ قُلْ اِنَّ الْاَمْرَ كُلَّهٗ لِلّٰهِ ؕ يُخْفُوْنَ فِيْٓ اَنْفُسِهِمْ مَّا لَا يُبْدُوْنَ لَكَ ؕ

फेरि मनुष्यलाई गुमिएको वस्तुमाथि दुख हुँदैन, कठिनाईमाथि कुनै प्रकारको आधीरता हुँदैन ।

[1]वर्णित व्यग्रता पश्चात अल्लाह तआ़लाले पुनः मुसलमानहरूमाथि कृपा गऱ्यो र रणक्षेत्रमा शेष डटिरहेका मुसलमानमाथि ऊँघ आच्छादित गरिदियो । यो ऊँघ अल्लाह तआ़लाको तर्फबाट शान्ति र विजयको लक्षण थियो । आदरणीय अबू तलहा (रजी़ अल्लाहु अन्हु) भन्नुहुन्छ कि म पनि ती मानिसहरूमध्ये थिए जसमाथि उहुदका दिन ऊँघ छाइराखेको थियो, यहाँसम्मकि मेरो हातबाट मेरो तलवार कैयौं पटक खसिहाल्यो । म त्यसलाई समात्थे, त्यो खसिहाल्थ्यो, फेरि समात्थे, त्यो फेरि खसिहाल्थ्यो । (सहीह बुख़ारी)

[2]यसबाट तात्पर्य अवसरवादी हुन् । स्पष्ट छ कि यस्तो परिस्थितिमा उनीहरूलाई त आफ्नै ज्यानको पीर थियो ।

[3]त्यो यो थियो कि नबी सल्लल्लाहु अलैहि वसल्लमको कथन असत्य छ, उनी जुन धर्मको निमन्त्रणा दिइराखेका छन्, त्यसको भविष्य ठिक छैन, उनीहरूलाई अल्लाहको सहायता प्राप्त छैन, आदि ।

[4]अर्थात् के अब हाम्रो लागि अल्लाह तआ़लाको तर्फबाट कुनै प्रकार विजयको सम्भावना छ ? अथवा यो कि के हाम्रो पनि कुनै कुरा चल्न सक्छ ? र मान्न सकिन्छ ?

[5]तिम्रो अथवा शत्रुको वशमा छैन, सहायता पनि उसको तर्फबाट आउनेछ र सफलता पनि त्यसको आदेशबाट हुनेछ, आदेश र निषेधाज्ञा पनि उसैको हुनेछ ।

يَقُولُونَ لَوْ كَانَ لَنَا مِنَ الْأَمْرِ شَيْءٌ مَّا قُتِلْنَا هَاهُنَا ۗ قُل لَّوْ كُنتُمْ فِي بُيُوتِكُمْ لَبَرَزَ الَّذِينَ كُتِبَ عَلَيْهِمُ الْقَتْلُ إِلَىٰ مَضَاجِعِهِمْ ۖ وَلِيَبْتَلِيَ اللَّهُ مَا فِي صُدُورِكُمْ وَلِيُمَحِّصَ مَا فِي قُلُوبِكُمْ ۗ وَاللَّهُ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ﴿١٥٤﴾

यिनीहरू आफ्ना हृदयका रहस्य तपाईंलाई भन्दैनन् ।[1] भन्दछन् कि यदि हामीलाई कुनै पनि अधिकार भएको भए यहाँ हामी मारिने थिएनौं ।[2] तपाईं भनिदिनुस् कि यदि तिमी आफ्ना घरहरुमा भएतापनि जसको भाग्यमा हत हुनु थियो उनी हत्याको स्थानतिर हिंडिहाल्थे ।[3] अल्लाह (तआला) ले तिम्रा अन्तः करणको परीक्षा गर्नु थियो र जे-जति तिम्रा हृदयमा छ त्यसलाई पवित्र गर्नु थियो ।[4] र अल्लाह (तआला) अन्तर्यामी छ (हृदयको रहस्य राम्ररी जान्दछ) ।[5]

إِنَّ الَّذِينَ تَوَلَّوْا مِنكُمْ يَوْمَ الْتَقَى الْجَمْعَانِ إِنَّمَا اسْتَزَلَّهُمُ الشَّيْطَانُ بِبَعْضِ مَا كَسَبُوا ۖ

(१५५) तिमीहरूमध्ये जसले त्यसदिन पिठ्यूँ फर्काए जुन दिन दुवै समूहबीच भिडन्त भएको थियो । यी मानिस आफ्ना केही कर्महरुका कारण शैतान

---

[1]आफ्ना हृदयमा द्वयवाद लुकाएका छन् । स्पष्ट यो गर्दछन् कि उनी सत्य पथको इच्छा गर्दछन् ।

[2]यिनीहरू त्यो आपसमा भन्दछन् अथवा हृदयमा राख्दछन् ।

[3]अल्लाह (तआला) को आदेश भयो, "यसप्रकारका कुरावाट के लाभ ? मृत्यु हर दिशामा आउनुछ । जहाँ अल्लाहवाट लेखिसकिएको छ । यदि तिमीहरू घरमा वसेको भए र तिम्रो मृत्यु कुनै हत्याको स्थानमा लेखेको भए, तिमीलाई तिम्रो मृत्यु त्यहाँ तानेर लग्थ्यो ।"

[4]यो जे-जति पनि भयो त्यसको एक उद्देश्य यो पनि थियो कि तिम्रै छातिमा जे-जति छ अर्थात् ईमान, त्यसको परीक्षा लिइयोस् (ताकि अवसरवादी अलग भइहालून) र फेरि तिम्रा हृदयको शैतानी शंकावाट पवित्र गरिदेओस् ।

[5]अर्थात् त्यसलाई त ज्ञान छ कि निःस्वार्थी मुसलमान को हुन् ? र अवसरवादको आवरण कसले टालेको छ ? धर्मयुद्धका अनेक विशेषताहरुवाट एउटा विशेषता यो हो कि यसवाट मुनाफ़िक र मुसलमान खुलारुपले सामु आउँछन्, जसलाई आम जनता पनि देख्छन् र चिनिहाल्छन् ।

وَلَقَدْ عَفَا اللّٰهُ عَنْهُمْ ؕ اِنَّ اللّٰهَ غَفُوْرٌ حَلِيْمٌ ﴿۱۵۵﴾

को बहकाउमा परे,[1] परन्तु विश्वास गर कि अल्लाहले उनीहरूलाई क्षमा गरिदियो।[2] अल्लाह (तआ़ला) क्षमाशील तथा धैर्यवान छ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَكُوْنُوْا كَالَّذِيْنَ كَفَرُوْا وَقَالُوْا لِاِخْوَانِهِمْ اِذَا ضَرَبُوْا فِي الْاَرْضِ اَوْ كَانُوْا غُزًّى لَّوْ كَانُوْا عِنْدَنَا مَا مَاتُوْا وَمَا قُتِلُوْا ۚ لِيَجْعَلَ اللّٰهُ ذٰلِكَ حَسْرَةً

(१५६) हे मुसलमानहरू! तिमीहरू उनीहरू जस्तो नबन जो कृतघ्न भए तथा उनका भाईहरू जब धर्तीमा यात्रा गरे अथवा धर्मयुद्धका लागि निस्के तब भने कि यदि उनीहरू हाम्रा साथमा भएका भए उनीहरूलाई मृत्यु आउने थिएन न उनको हत्या हुन्थ्यो[3] (उनीहरूको यस विचारको कारण यो हो कि) अल्लाह यसलाई उनीहरूका हृदयको शोकको कारण बनाइदेओस्[4] तथा

---

[1]अर्थात् उहदमा मुसलमानहरूबाट जुन चूक र कमी भयो त्यसका कारण उनका पछिल्ला केही निर्बलता थिए जसको कारण त्यस दिन शैतान उनीहरूलाई विचलित गर्न सफल भइहाल्यो। जुनप्रकार केही सलफ (पूर्वजनहरु) को कथन छ कि पुण्यको फल यो पनि हो कि त्यसको पश्चात र पुण्य गर्नमा बल प्राप्त हुन्छ र नराम्रोको कुफल यो हो कि त्यस पश्चात र नराम्रो कर्म गर्न ढोकाहरु खुलिहाल्छन् अर्थात् पुण्यबाट पुण्यको र पापबाट पापको मार्ग खुल्दछ र सरल भईहाल्छ।

[2]अल्लाह (तआ़ला) सहाबाका भलहरुको परिणाम र कारणहरूको पश्चात आफ्नो तर्फबाट क्षमाको घोषणा गरिराखेको छ र जसबाट एक त उनीहरूको अल्लाह तआ़लाको सदनमा प्रिय हुनु स्पष्ट भएर आउँछ, र अर्कोतिर यो सामान्य मुसलमानहरूलाई चेतावनी हो कि जब उनलाई सत्य विश्वासी अल्लाह तआ़लाले भनिदिएको छ, त अब कसैलाई यो अधिकार छैन कि उनलाई अपमानित गरोस् अथवा उनको आलोचना गरोस्।

[3]ईमानवालाहरूलाई अधर्मी एवं अवसरवादीहरू जस्ताको विश्वासबाट रोकिंदैछ किनभने यो विश्वास कायरताको आधार हो यसको विपरीत जब विश्वास हुन्छ कि जीवन मरण अल्लाह (तआ़ला) को हातमा छ, अनि यो कि मरणको समय निर्धारित छ, त यसबाट मनुष्य भित्र संकल्प तथा साहस एवं अल्लाहको मार्गमा लड्ने भावनाको सृष्टि हुन्छ।

[4]उपरोक्त कुविश्वास हार्दिक पश्चातापको नै हेतु बन्दछ कि यदि उनीहरू यात्रामा अथवा रणभूमिमा नभएको भए, र घरमै बसिरहेको भए मृत्युबाट बाँचिहाल्थे। जबकि मृत्यु त सुदृढ दुर्गहरुमा आउँछ।

فِي قُلُوبِهِمْ ۗ وَاللَّهُ يُحْيِي وَيُمِيتُ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ

जीवन र मृत्यु अल्लाहले नै दिन्छ, तथा अल्लाह तिम्रा कर्महरुलाई देखिराखेको छ ।

وَلَئِن قُتِلْتُمْ فِي سَبِيلِ اللَّهِ أَوْ مُتُّمْ لَمَغْفِرَةٌ مِّنَ اللَّهِ وَرَحْمَةٌ خَيْرٌ مِّمَّا يَجْمَعُونَ

(१५७) यदि तिमी अल्लाहको मार्गमा शहीद (बलिदान) हुन्छौ अथवा मर्छौ भने अल्लाहको क्षमा त्यस (धन) भन्दा उत्तम छ जुन उनीहरू एकत्रित गरिराखेका छन् ।[1]

وَلَئِن مُّتُّمْ أَوْ قُتِلْتُمْ لَإِلَى اللَّهِ تُحْشَرُونَ

(१५८) तिमी मर्छौ अथवा मारिन्छौ, तिमीलाई अल्लाहको पासमा नै एकत्रित हुनुछ ।

فَبِمَا رَحْمَةٍ مِّنَ اللَّهِ لِنتَ لَهُمْ ۖ وَلَوْ كُنتَ فَظًّا غَلِيظَ الْقَلْبِ لَانفَضُّوا مِنْ حَوْلِكَ ۖ فَاعْفُ عَنْهُمْ وَاسْتَغْفِرْ لَهُمْ وَشَاوِرْهُمْ

(१५९) अल्लाह तआलाको कृपाको कारण तपाईं उनीहरूका निम्ति कोमल बन्नुभएको छ र यदि तपाईं कटु वचन तथा कठोर हृदय भएको भए, त यी सबै तपाईंको पासबाट भाग्थे, तसर्थ तपाईं उनीहरूलाई क्षमा गर्नुस् । र उनीहरूको लागि क्षमा-याचना गर्नुस्

﴿ أَيْنَمَا تَكُونُوا يُدْرِككُّمُ الْمَوْتُ وَلَوْ كُنتُمْ فِي بُرُوجٍ مُّشَيَّدَةٍ ﴾

"तिमी जहाँकही भएपनि मृत्युले तिमीलाई पाइहाल्नेछ, यदि तिमी सुदृढ दुर्गहरुमा हौ ।"(अल-निसा-७८)

यसकारण पश्चातापबाट मुसलमान नै बाँच्न सक्छन् । जसको विश्वास सही छ ।

[1]मृत्यु त निश्चय नै आउनुछ, तर यदि मृत्यु यसरी आओस् जसपश्चात मनुष्य अल्लाहको क्षमा र कृपाको पात्र भइहालोस्, त यो संसारको धन-सम्पत्तिभन्दा उत्तम छ, जसलाई एकत्रित गर्न मनुष्य जीवन अर्पित गरिदिन्छ । तसर्थ अल्लाहको मार्गमा धर्मयुद्ध गर्नबाट पछि हट्नु हुँदैन । यससित लगाव तथा प्रेम हुनुपर्छ किनभने यसबाट अल्लाहको क्षमा र कृपा निश्चित भईहाल्छ । परन्तु यसको साथमा शर्त छ कि मनको स्वच्छताको साथ होस् ।

[2]नबी सल्लल्लाहु अलैहि वसल्लम जो सर्वोच्च व्यवहारसित युक्त थिए । अल्लाह तआला आफ्नो यस पैगम्बरमाथि एक परोपकारको वर्णन गरिराखेको छ कि तपाईं सल्लल्लाहु अलैहि वसल्लमभित्र जुन कोमलता छ यो अल्लाह तआलाको विशेष कृपाको परिणाम हो । यदि उहाँ सल्लल्लाहु अलैहि वसल्लम भित्र यो नभएको भए यसको विपरीत उहाँ सल्लल्लाहु अलैहि वसल्लम दुर्व्यवहारी र कठोर हृदयको हुनुहुन्थ्यो, त मानिसहरू उहाँ सल्लल्लाहु अलैहि वसल्लमबाट हुनुको सट्टा टाढा भाग्थे । यसकारण तपाईं सल्लल्लाहु अलैहि वसल्लम क्षमाले नै काम लिनुस् ।

فِي الْأَمْرِ ۖ فَإِذَا عَزَمْتَ فَتَوَكَّلْ عَلَى اللَّهِ ۚ إِنَّ اللَّهَ يُحِبُّ الْمُتَوَكِّلِينَ ﴿١٥٩﴾

र काममा परामर्श उनीहरूसित गर्दैरहनुस् ।[1] अनि जब तपाईंको दृढ निश्चय हुन्छ, तब अल्लाह (तआला) माथि भरोसा गर्नुस् ।[2] र अल्लाह (तआला) भरोसा गर्नेहरूलाई मित्र ठान्छ ।

إِن يَنصُرْكُمُ اللَّهُ فَلَا غَالِبَ لَكُمْ ۖ وَإِن يَخْذُلْكُمْ فَمَن ذَا الَّذِي يَنصُرُكُم مِّن بَعْدِهِ ۗ وَعَلَى اللَّهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُونَ ﴿١٦٠﴾

(१६०) यदि अल्लाह तआला तिम्रो सहायता गर्दछ, भने तिमीमाथि कोही प्रभावी हुन सक्दैन, र यदि उनीहरू तिमीलाई छोडिदिन्छन्, भने को छ जो तिम्रो सहायता गर्दछ ? र निष्ठावानहरूले अल्लाह तआलामाथि नै भरोसा गर्नु पर्दछ ।

[1]अर्थात् मुसलमानहरूको सान्त्वनाको निम्ति परामर्श गर्दै रहनुस् । यस आयतबाट परामर्शको महत्व, विशेषता तथा लाभ र त्यसको आवश्यकता एवं औचित्य सिद्ध हुन्छ । परामर्श लिनुको यो आदेश कंही विद्वानहरूका निकट अनिवार्य छ र कंहीको विचारमा समुचित । (इब्ने कसीर) इमाम शौकानी लेख्दछन् कि, "राज्याधिकारीहरूले आलिमहरूसित यस्ता समस्यामा परामर्श गर्नुपर्दछ, जसको उनलाई ज्ञान छैन अथवा त्यसका विषयमा उनीहरूलाई शंका छ । सेनाका उच्चअधिकारीहरूसित सेनाको समस्यामा, समाजका प्रमुखहरूसित जनताका समस्याका विषयमा तथा अधिनस्थ अधिकारीहरूसित उनका क्षेत्रको आवश्यकता तथा प्रमुखताको विषयमा परामर्श गरून ।" इब्ने अतिया भन्दछन्, "यस्ता शासकहरूलाई पदबाट हटाउनमा कुनै मतभेद छैन, जो ज्ञानीहरू र धार्मिक व्यक्तिसित परामर्श गर्दैनन् ।" यो परामर्श केवल ती समस्यासित सीमित छ, जसका विषयमा धार्मिक नियम मौन छ अथवा जसका सम्बन्ध व्यवस्थाको विषयसित छ । (फतहुल कदीर)

[2]अर्थात् परामर्श पश्चात जसमा तपाईंको विचार पक्का भईहाल्छ, तब अल्लाहमा भरोसा गरी सम्पन्न गरिहाल्नुस् । यसबाट त एउटा कुरो यो ज्ञात भयो कि परामर्श पश्चात अन्तिम निर्णय शासककै हुनेछ, न कि परामर्शदाता अथवा उनीहरूका बहुमतको जस्तो कि लोकतन्त्रमा छ । दोस्रो यो कि सारा भरोसा अल्लाहमाथि नै हुनेछ, न कि परामर्श दिनेवालाहरूको बुद्धि अथवा ज्ञानमाथि । आउने आयतमा पनि अल्लाहमाथि भरोसा गर्नुमा थप बल दिईदैछ ।

وَمَا كَانَ لِنَبِيٍّ أَنْ يَغُلَّ ۚ وَمَنْ يَغْلُلْ يَأْتِ بِمَا غَلَّ يَوْمَ الْقِيَامَةِ ۚ ثُمَّ تُوَفَّىٰ كُلُّ نَفْسٍ مَا كَسَبَتْ وَهُمْ لَا يُظْلَمُونَ ﴿١٦١﴾

(१६१) र यो असम्भव छ कि नबीद्वारा विश्वासघात हुनेछ ।[1] प्रत्येक विश्वासघाती केयामतका दिन विश्वासघातलाई लिएर उपस्थित हुनेछ, अनि प्रत्येक व्यक्तिलाई आफ्ना कर्महरुका पूरा-पूरा प्रतिफल दिइनेछ, र उनीप्रति अत्याचार गरिने छैन ।

أَفَمَنِ اتَّبَعَ رِضْوَانَ اللَّهِ كَمَنْ بَاءَ بِسَخَطٍ مِنَ اللَّهِ وَمَأْوَاهُ جَهَنَّمُ ۚ وَبِئْسَ الْمَصِيرُ ﴿١٦٢﴾

(१६२) के त्यो व्यक्ति जसले अल्लाहको प्रसन्नताको अनुसरण गऱ्यो त्यसको समान छ जो अल्लाहको क्रोधका साथ फर्कियो ? तथा त्यसको स्थान नरक छ र त्यो साह्रै नराम्रो स्थान हो ।

هُمْ دَرَجَاتٌ عِنْدَ اللَّهِ ۗ وَاللَّهُ بَصِيرٌ بِمَا يَعْمَلُونَ ﴿١٦٣﴾

(१६३) अल्लाह तआलासँग तिनका अलग-अलग पद छन् र तिनका सबै कर्मलाई अल्लाह राम्ररी देखिराखेको छ ।

لَقَدْ مَنَّ اللَّهُ عَلَى الْمُؤْمِنِينَ إِذْ بَعَثَ فِيهِمْ رَسُولًا مِنْ أَنْفُسِهِمْ

(१६४) नि:सन्देह मुसलमानिहरूमाथि अल्लाहको उपकार छ कि त्यसले तिनैमध्येबाट एउटा रसूल

[1]उहुदको युद्धमा जो मानिसहरू मोर्चा छाडि परिहार एकत्र गर्न दगुरिहालेका थिए, उनको विचार थियो कि यदि हामी पुगेनौं भने सारा परिहार अरुहरूले लगिदिने छन्, यसमाथि चेतावनी दिइँदैछ कि तिमीले यस्तो किन सोच्यौ कि तिम्रो भाग तिमीलाई प्राप्त हुने छैन ? के तिमीलाई उहुदका सेनापति मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको ईमानदारीमाथि सन्तोष छैन ? याद राख कि एक ईशदूतद्वारा विश्वासघात गर्न सकिन्न किनभने विश्वासघात नबूअतको विपरीत छ, यदि नबी विश्वासघाती छ भने त्यसको नबूअतमा विश्वास किन गर्ने ? विश्वासघात महापाप हो, हदीसमा यसको कटु आलोचना गरिएको छ ।

يَتْلُوا عَلَيْهِمْ اٰيٰتِهٖ وَيُزَكِّيْهِمْ وَيُعَلِّمُهُمُ الْكِتٰبَ وَالْحِكْمَةَ ۚ وَاِنْ

उनीहरू माझ पठायो ।[1] जो उनीहरूलाई त्यसका आयतहरू पढेर सुनाउँछ र उनीहरूलाई शुद्ध गर्दछ र उनीहरूलाई किताब तथा बुद्धि-ज्ञान सिकाउँछ ।[2] यद्यपि

[1]नबीलाई मानव तथा मानव जातिबाट हुने कुराको वर्णन अल्लाह एउटा उपकार स्वरुप गरिराखेको छ र वास्तवमा यो परोपकार हो कि यसप्रकार एक त त्यसले आफ्नो वर्गको भाषा र शैलीमा नै अल्लाहको सन्देश पुऱ्याउने छ जसलाई बुझ्न कुनै व्यक्तिलाई कुनै कठिनाई हुनेछैन । अर्को कुरो मानिसहरू समान जातिका भएको कारण उसित निकट हुनेछन् । तेस्रो कुरो मनुष्यको लागि मनुष्यको अनुसरण गर्न त सम्भव छ, परन्तु फरिश्ताहरूको अनुसरण त्यसको वशमा छैन र न फरिश्ता मनुष्यको चेतना तथा ज्ञानको गहिराई तथा सूक्ष्मताको प्रवोध गर्नसक्दछ । यसकारण यदि पैगम्बर फरिश्ताहरू मध्येबाट भएको भए उनीहरू यी सबै गुणहरूबाट वञ्चित हुन्थे जुन धर्म प्रचारको लागि अति आवश्यक छ । यसकारण जति पनि नबी आएका छन् सबै मानव थिए, कुरआनले उनको मानवतालाई अति स्पष्टरुपले वर्णन गरेको छ । जस्तो कि आदेश छ :

﴿ وَمَا أَرْسَلْنَا مِن قَبْلِكَ إِلَّا رِجَالًا نُّوحِي إِلَيْهِمْ ﴾

"हामीले तपाई भन्दा पहिला जति पनि रसूल पठायौं ती सबै पुरुष थिए, जसमाथि हामी आदेश गर्दथ्यौं ।" (यूसुफ-१०९)

﴿ وَمَا أَرْسَلْنَا قَبْلَكَ مِنَ الْمُرْسَلِينَ إِلَّا إِنَّهُمْ لَيَأْكُلُونَ الطَّعَامَ وَيَمْشُونَ فِي الْأَسْوَاقِ ﴾

"हामीले तपाईंभन्दा पहिला जति पनि रसूल पठायौं सबै भोजन गर्दथे र बजारमा हिंड्दथे ।" (सूरः अल-फुरकान, २०)

र स्वयं नबी रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको मुखार बिन्दुबाट भन्न लगाइयो ।

﴿ قُلْ إِنَّمَا أَنَا بَشَرٌ مِّثْلُكُمْ يُوحَىٰ إِلَيَّ ﴾

"तपाई भनिदिनुस् कि म पनि तिमीहरू जस्तै मनुष्य हूँ, परन्तु ममाथि वह्यी उत्रन्छ ।" (हा.मीम.अल-सजदः-६)

आज धेरैजसो मनका अन्धाहरू यस कुरालाई बुझ्दैनन् र कुमार्गमा छन् ।

[2]यस आयतमा दूतत्वका तीन मुख्य उद्देश्यको वर्णन छ । (१) आयतहरूको तिलावत (२) शुद्धिकरण (३) किताब र बुद्धि-ज्ञानको शिक्षा । किताबको शिक्षामा तिलावत स्वयं आइहाल्छ । तिलावतका साथ नै शिक्षा सम्भव छ । तिलावत बिना शिक्षाको अस्तित्व छैन । यसको अतिरिक्त तिलावतलाई एउटा उद्देश्यको रुपमा वर्णन गरिएको छ । यसबाट यस बिन्दुको स्पष्टीकरण हुन्छ कि तिलावत

كَانُوا مِنْ قَبْلُ لَفِي ضَلَالٍ مُّبِينٍ

अवश्य[1] त्यसभन्दा पहिला यी सबै स्पष्टरुपले विचलित थिए ।

أَوَلَمَّا أَصَابَتْكُم مُّصِيبَةٌ قَدْ أَصَبْتُم مِّثْلَيْهَا قُلْتُمْ أَنَّىٰ هَٰذَا ۖ قُلْ هُوَ مِنْ عِندِ أَنفُسِكُمْ ۗ إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ

(१६५) (कस्तो कुरो हो) कि जब तिमीमाथि एउटा आपत्ति आयो जसको दुईगुना तिमीले उनीहरूलाई पुऱ्याएका छौ,[2] तब तिमीले भन्यौ कि यो कहाँबाट आयो ? (हे ईशदूत !) तपाईं भनिदिनुस् कि यो तिमीले स्वयं आफूमाथि पारेका छौ,[3] निश्चय नै प्रत्येक विषयमा अल्लाहको सामर्थ्य छ ।

وَمَا أَصَابَكُمْ يَوْمَ الْتَقَى الْجَمْعَانِ فَبِإِذْنِ اللَّهِ وَلِيَعْلَمَ الْمُؤْمِنِينَ

(१६६) तथा दुबै समूहको भिडन्तका दिन तिमीलाई जे-जति पुग्यो त्यो अल्लाहको आज्ञाले पुग्यो, र ताकि अल्लाह मुसलमानहरूलाई प्रत्यक्ष रूपले बुझोस् ।

---

यस विन्दुको स्पष्टीकरण हुन्छ कि तिलावत (कुर्आन पठन) स्वयं पनि पवित्र एवं पुण्यको कारण हो । चाहे पाठक त्यसको अर्थ बुझोस् अथवा नबुझोस् । कुर्आनको अर्थ तथा उद्देश्य बुझ्ने प्रयत्न गर्नु प्रत्येक मुसलमानको लागि आवश्यक छ, परन्तु जबसम्म यो उद्देश्य प्राप्त हुँदैन अथवा यति ज्ञान तथा योग्यता प्राप्त नहोस्, कुर्आनको तिलावतमा आलस्य अथवा रोकिरहनु उचित होइन । शुद्धिको अर्थ हो विश्वास कर्म र चरित्रको सुधार जुनप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लमले उनीहरूलाई मूर्तिपूजाबाट हटाएर एकेश्वरवादतिर लग्नुभयो । यसैप्रकार अति असभ्य र कुकर्मी समाजलाई सभ्य र चरित्रको मार्गमा हिंडाउनु भयो । विज्ञान (बुद्धि-ज्ञान) व्याख्याकारहरूका निकट हदीस हो ।

[1]यहाँ إن को अर्थ आवश्य, निःसन्देह तथा निःशंका हो ।

[2]अर्थात् उहुदमा तिम्रा सत्तरी व्यक्तिहरू शहीद (बलिदान) भए, त बद्रमा तिमीले सत्तरी जनालाई मारेका थियौ र सत्तरी बन्दी बनाएका थियौ ।

[3]अर्थात् तिम्रो त्यस गल्तीको कारण जुन रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको बलपूर्वक आदेश उपरान्त तिमीले जुन डाँडाको मोर्चा छाडेर गऱ्यौ, जसको विवरण पहिले आइसकेको छ कि तिम्रो त्यस गल्तीको कारण काफिरहरुलाई फेरिबाट आक्रमण गर्नुको अवसर प्राप्त भयो ।

وَلِيَعْلَمَ الَّذِينَ نَافَقُوا ۚ وَقِيلَ لَهُمْ تَعَالَوْا قَاتِلُوا فِي سَبِيلِ اللَّهِ أَوِ ادْفَعُوا ۖ قَالُوا لَوْ نَعْلَمُ قِتَالًا لَّاتَّبَعْنَاكُمْ ۗ هُمْ لِلْكُفْرِ يَوْمَئِذٍ أَقْرَبُ مِنْهُمْ لِلْإِيمَانِ ۚ يَقُولُونَ بِأَفْوَاهِهِم مَّا لَيْسَ فِي قُلُوبِهِمْ ۗ وَاللَّهُ أَعْلَمُ بِمَا يَكْتُمُونَ ﴿١٦٧﴾

(१६७) तथा द्वयवादीहरूलाई जानोस्[1] जससित भनियो कि आउ अल्लाहको मार्गमा लड अथवा आक्रमणबाट रक्षा गर, त उनीहरूले भने कि यदि हामीलाई थाहा भएको भए कि लडाई हुनेछ त अवश्य तिम्रो साथ दिन्थ्यौं,[2] उनी त्यस दिन ईमानको अपेक्षा कुफ्र (अविश्वास) सित निकटतम् थिए,[3] आफ्नो मुखले ती कुरा गरिराखेका थिए जुन उनका हृदयमा थिएनन्[4] तथा अल्लाह त्यससित अवगत छ जसलाई उनीहरू लुकाउँछन् ।

الَّذِينَ قَالُوا لِإِخْوَانِهِمْ وَقَعَدُوا لَوْ أَطَاعُونَا مَا قُتِلُوا ۗ

(१६८) जसले आफ्ना भाईहरूका लागि भने र स्वयं पनि बसिरहे कि यदि उनीहरू हाम्रा कुरा

[1]अर्थात् उहुदमा तिमीलाई जे-जति हानि पुग्यो, त्यो अल्लाहको आदेशले पुग्यो (ताकि फेरि तिमी रसूलका आदेशहरुका पालन गर) यसको अतिरिक्त उद्देश्य यो थियो कि ईमानवाला र मुनाफिकहरूलाई अलग्ग गरी ईमानवालाहरूलाई श्रेष्ठता प्रदान गरियोस् ।

[2]युद्ध जान्नुको अर्थ यो हो कि यदि वास्तवमा तपाईंहरू युद्धका लागि हिंडिराखेका भए हामी पनि साथ दिन्थ्यौं, परन्तु तपाईंहरू युद्धको सट्टा आफूलाई कालको मुखमा पुऱ्याइराख्नु भएको छ, यस्ता गलत कार्यमा हामीले तपाईंको साथ किन दिने ? यो कुरा अब्दुल्लाह बिन उबई र त्यसका साथीहरूले यसकारण भनेका थिए कि उनको कुरा मानिएको थिएन र त्यसबेला पनि उनी शौत नामक स्थानमा पुगेर फर्किराखेका थिए । अब्दुल्लाह बिन हराम अन्सारी उनीहरूलाई सम्झाई-बुझाई युद्धमा सम्मिलित गर्ने प्रयास गरिराखेका थिए । (यसको केही वर्णन गुज्रिसकेको छ)

[3]आफ्नो यस विभेद तथा यी कुराहरूको कारण जुन उनीहरूले गरे ।

[4]अर्थात् मुखले त्यो भने, जुन वर्णन भयो, तर हृदयमा यो थियो कि हामी अलग्ग हुनको कारण मुसलमान निर्बल हुनेछन् । दोस्रो काफिरहरूलाई लाभ पुग्नेछ । उद्देश्य इस्लाम, मुसलमान र नबी सल्लल्लाहु अलैहि, वसल्लमलाई हानि पुऱ्याउनु थियो ।

قُلْ فَادْرَءُوْا عَنْ اَنْفُسِكُمُ الْمَوْتَ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١٦٨﴾

मानेको भए हत (हत्या) गरिन्न थिए । भनिदेउ कि यदि तिमी साँचो हौ भने आफ्नो मृत्युलाई सारिदेउ ।[1]

وَلَا تَحْسَبَنَّ الَّذِيْنَ قُتِلُوْا فِيْ سَبِيْلِ اللّٰهِ اَمْوَاتًا ۭ بَلْ اَحْيَاۗءٌ عِنْدَ رَبِّهِمْ يُرْزَقُوْنَ ﴿١٦٩﴾ۙ

(१६९) र जुन मानिसहरू अल्लाहको मार्गमा मारिए उनीहरूलाई मृत नठान बरु उनीहरू जीवित छन्, आफ्नो पोषकको पासमा जीविका दिइराखिएका छन् ।[2]

فَرِحِيْنَ بِمَآ اٰتٰىھُمُ اللّٰهُ مِنْ فَضْلِهٖ ۙ وَيَسْتَبْشِرُوْنَ بِالَّذِيْنَ لَمْ يَلْحَقُوْا بِهِمْ مِّنْ خَلْفِهِمْ ۙ اَلَّا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿١٧٠﴾

(१७०) अल्लाह तआलाले आफ्नो कृपा जुन उनीहरूलाई दिएको छ, त्यसबाट उनी अति प्रसन्न छन् र प्रसन्नता मनाइराखेका छन् ती मानिसहरूको विषयमा जो अहिलेसम्म उनीसित भेटेका छैनन्, उनीहरूका पछाडी छन् ।[3] यस कुरामा कि उनीहरूलाई न त कुनै भय छ र न कुनै क्षोभ ।

[1]यो मुनाफ़िक़हरूको त्यस कथनको खण्डन हो कि "यदि उनीहरू हाम्रो कुरा मानिहालेको भए मारिन्न थिए ।" अल्लाह तआलाले आदेश गऱ्यो कि यदि तिमी साँचो हौ भने आफूमाथिबाट मृत्युलाई हटाइदेउ, तात्पर्य यो हो कि भाग्यले कसैलाई विलग गरिएन, मृत्यु पनि जहाँ र जुनप्रकार भाग्यमा छ । त्यसै स्थानमा र त्यसैप्रकार आएर नै रहन्छ । यसकारण धर्मयुद्ध तथा अल्लाहको मार्गमा लड्नुबाट रोकिनु अथवा पलायनबाट, कोही मृत्युको पञ्जाबाट बाँच्न सक्दैन ।

[2]शहीदहरूको यो जीवन वास्तविक छ अथवा काल्पनिक ? नि:सन्देह वास्तविक छ, परन्तु यसको ज्ञान संसारवालालाई छैन । जस्तो कि कुरआनले स्पष्ट गरिदिएको छ । कृपया सूर: अल-बक़र:-१५४ हेर्नुस् । अनि यस जीवनको अर्थ के हो ? केही भन्छन् कि कब्रहरु (चिहानहरु) मा तिनका आत्मा फर्काइन्छन् र उनी अल्लाहद्वारा प्रदान गरिएका सामग्रीहरूको प्रयोग गरी आनन्दित हुन्छन् । केही भन्छन् कि स्वर्गमा फलहरुको सुगन्ध उनीहरूलाई आउने गर्छन्, जसबाट उनका पवित्र आत्मा प्रफुल्लित रहन्छन् । परन्तु हदीसबाट एउटा तेस्रो परिस्थिति सामु आउँछ, यसकारण त्यही सही छ त्यो यो हो कि उनका आत्मा हरिया पंक्षीहरूको शरीरमा अथवा छातीमा प्रवेश गराईन्छ र ती स्वर्गमा खाँदै-पिउँदै घुम्छन् र आफ्ना प्रदत्त सामग्रीहरूबाट लाभान्वित भइराख्छन् । (फ़तहुल कदीर निर्देशित सहीह मुस्लिम किताबुल ईमार:)

[3]अर्थात् ती मुसलमान जो उनका पछाडी संसारमा जीवित छन् अथवा धर्म युद्धमा व्यस्त छन्, यिनीहरूका लागि यो कामना गर्दछन् कि काश उनीहरूलाई पनि शहादत प्राप्त हुन्थ्यो र उनीहरूलाई हाम्रो जस्तो यहा आनन्दित जीवन प्राप्त

(१७१) उनी अल्लाहको कृपा र दयाबाट प्रसन्न हुन्छन् र त्यसबाट पनि कि अल्लाह तआ़ला ईमानवालाहरूको प्रतिफललाई नष्ट गर्दैन ।[1]

يَسْتَبْشِرُونَ بِنِعْمَةٍ مِّنَ اللَّهِ وَفَضْلٍ وَأَنَّ اللَّهَ لَا يُضِيعُ أَجْرَ الْمُؤْمِنِينَ ﴿١٧١﴾

हुन्थ्यो । उहुदका शहीदहरूले अल्लाहको दरबारमा प्रार्थना गरे कि के हाम्रा ती मुसलमान भाईहरू जो हाम्रा पछाडी संसारमा जीवित छन्, उनीहरूलाई हाम्रो अवस्था र आनन्दपूर्ण जीवनको सूचना दिनेवाला कोही छ ? ताकि उनीहरू युद्ध र धर्मयुद्धबाट पछाडी नहटून् । अल्लाहबाट यो आयत आदेश भयो, "म तिम्रो कुरा उनीहरूसम्म पुऱ्याउन सक्दछु ।" यसकारण अल्लाहले यो आयत उतार्‍यो । (मुसनद अहमद ३६५-३६६, सुनन अबू दाऊद किताबुल जिहाद) यसका अतिरिक्त कैयन् हदीसहरूबाट शहादतको श्रेष्ठता सिद्ध हुन्छ । जस्तो कि एक हदीसमा छ :

مَا مِنْ نَفْسٍ تَمُوتُ، لَهَا عِنْدَ اللهِ خَيْرٌ يَسُرُّهَا أَنْ تَرْجِعَ إِلَى الدُّنْيَا إِلَّا الشَّهِيدُ، فَإِنَّهُ يَسُرُّهُ أَنْ يَرْجِعَ إِلَى الدُّنْيَا فَيُقْتَلَ مَرَّةً أُخْرَى لِمَا يَرَى مِنْ فَضْلِ الشَّهَادَةِ

"कुनै मर्नेवाली आत्मा जसलाई अल्लाहकहाँ उच्च स्थान प्राप्त छ, संसारमा फर्कने चेष्टा गर्दैन, परन्तु शहीद संसारमा पुनः आउने चेष्टा गर्दछ, ताकि त्यो पुनः अल्लाहको मार्गमा शहीद होस्, यो कामना त्यो यसकारण गर्दछ कि शहादतको श्रेष्ठतालाई त्यसले देखिसकेको हुन्छ ।" (मुसनद अहमद ३/१२६, सहीह मुस्लिम किताबुल इमारः, बाँब फज़्लुशशहादः)

आदरणीय जाबिर (रजी़ अल्लाह अन्हु) भन्दछन् कि रसूलल्लाह सल्लल्लाहु अलैहि वसल्लमले मसित भन्नुभयो कि के तिमीलाई ज्ञात छ कि अल्लाह तआ़लाले तिम्रो पितालाई जीवित गर्‍यो र भन्यो कि मसित आफ्नो कुनै कामनाको प्रदर्शन गर (ताकि म त्यसलाई पूरा गरुँ) तिम्रो पिताले उत्तर दियो कि मेरो त यो कामना छ कि मलाई पुनः संसारमा पठाइयोस् ताकि पुनः तिम्रो मार्गमा मारियूँ, अल्लाह तआ़लाबाट हुकूम भयो यो त असम्भव छ किनभने मेरो निर्णय छ कि मेरो पासमा आएपछि कोही संसारमा फिर्ता जान सक्दैन । (मुसनद अहमद ३/३६१)

[1]यो आनन्दमयी कुरा पहिलो आनन्ददायक कुरोको पुनरावृत्ति हो र यस कुरोको वर्णन हो कि उनको प्रसन्नता मात्र भय र दुखबाट बञ्चित भएको कारणले होइन । बरु अल्लाहको कृपा र त्यसको अनमोल दया र कृपाको कारण हो । र केही ब्याख्याकारहरूका अनुसार पहिलो प्रसन्नताको सम्बन्ध संसारमा रहिरहने भाइहरूको कारण हो, र यो दोस्रो प्रसन्ता त्यस उपहार र कृपाको हो, जुन अल्लाह तआ़लाको तर्फबाट स्वयं उनीमाथि भयो । (फ़तहुल क़दीर)

(१७२) जुन मानिसहरू घायल भए पश्चात (पनि) अल्लाह एवं रसूलको आदेश माने उनीहरूमध्ये जसले सत्कार गरे तथा परहेज़गार (सत्कर्मी) रहे उनको लागि ठूलो प्रतिफल छ।[1]

ٱلَّذِينَ ٱسْتَجَابُوا۟ لِلَّهِ وَٱلرَّسُولِ مِنۢ بَعْدِ مَآ أَصَابَهُمُ ٱلْقَرْحُ ۚ لِلَّذِينَ أَحْسَنُوا۟ مِنْهُمْ وَٱتَّقَوْا۟ أَجْرٌ عَظِيمٌ ﴿١٧٢﴾

(१७३) जोसित मानिसहरूले भनें कि मानिसहरू तिम्रा लागि एकत्रित भइसकेका छन्, अतः उनीसित तर्स; त उनको ईमानमा बृद्धि भयो र भने कि अल्लाह हाम्रो लागि पर्याप्त छ तथा त्यो उत्तम संरक्षक छ।[2]

ٱلَّذِينَ قَالَ لَهُمُ ٱلنَّاسُ إِنَّ ٱلنَّاسَ قَدْ جَمَعُوا۟ لَكُمْ فَٱخْشَوْهُمْ فَزَادَهُمْ إِيمَٰنًا وَقَالُوا۟ حَسْبُنَا ٱللَّهُ وَنِعْمَ ٱلْوَكِيلُ ﴿١٧٣﴾

[1]जब मूर्तिपूजक उहदको युद्धबाट फर्के त उनीहरूलाई बाटोमा स्मरण भयो कि उनीहरूले एउटा राम्रो अवसर गुमाइहाले। मुसलमान पराजयको कारण साहस गुमाइसकेका थिए र भयभीत थिए। हामीले यसबाट लाभ उठाएर मदीनामाथि शक्तिशाली आक्रमण गरिदिनु पर्थ्यो, ताकि इस्लामको यो बिरुवा आफ्नै धर्ती (मदीना) बाट नै नष्ट भइहाल्थ्यो। यता मदीना पुगेपछि नबी सल्लल्लाहु अलैहि वसल्लमलाई विचार आयो कि कहीं मूर्तिपूजक पुनः फर्केर नआऊन्। यसकारण उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सहाबालाई लड्नको लागि तयार गर्नुभयो र वहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभए पश्चात सहाबाहरू दुखी भए पनि तयार भईहाले। मुसलमानहरूको यो सेना-टोली जब मदीनाबाट आठ मील टाढा स्थित "हमराउल असद"[1] नामक स्थानमा पुग्यो, तब मूर्तिपूजकहरूलाई भय प्रतीत भयो, अतः उनीहरूले आफ्नो विचार परिवर्तन गरिहाल्यो। र उनीहरू मदीनामाथि आक्रमण गर्नुको सट्टा मक्का वापस गइहाले। त्यसपछि नबी सल्लल्लाहु अलैहि वसल्लम र वहाँका साथी मदीना फर्केर आइहाले। यस आयतमा मुसलमानहरूका यसै अल्लाह र रसूलको आज्ञा पालनको भावनाको प्रशंसा गरिएको छ। केहीले यस आयतलाई उतार्नुको कारण अबू सुफ़ियान (जो अझै ईमान ल्याएका थिएनन्) को त्यस धम्कीलाई भनेका छन्, "कि आगामी वर्ष छुटेको बद्रमा हाम्रो तिम्रो मुक़ाबिला (भिडन्त) हुनेछ।" यसमा मुसलानहरूले पनि अल्लाह र त्यसको रसूलको आज्ञापालन गर्दै यस साहसलाई प्रदर्शन गरेका थिए कि धर्मयुद्धमा पूर्णरुपले भाग लिन दृढ विचार गरिसकेको छन्। (उद्धृत फ़तहुल कदीर तथा इब्ने कसीर) परन्तु यो अन्तिम कथन पूर्वको विषयसित मेल खाँदैन।

[1]"हमराउल असद" र भनिन्छ कि सानो बद्रको स्थानमा अबू सुफ़ियान केही मानिसहरूको सेवा धन दिएर प्रदान गऱ्यो र उनीहरूद्वारा मुसलमानहरूमा यो अफवा फिंजाइदियो कि मक्काका मूर्तिपूजक युद्धका लागि पूर्णरुपले तयारी गरिराखेका छन्। ताकि यो सुनेर मुसलमानहरूको हिम्मत परास्त भइहालोस्। केही कथनहरूमा यो छ कि यो काम शैतानले आफ्ना शिष्यहरू लियो। परन्तु मुसलमान यो अफवाह सुनेर अझ सुदृढ निर्णय एवं साहसले तयार भइहाले।

فَانْقَلَبُوا بِنِعْمَةٍ مِّنَ اللَّهِ وَفَضْلٍ لَّمْ يَمْسَسْهُمْ سُوءٌ وَاتَّبَعُوا رِضْوَانَ اللَّهِ وَاللَّهُ ذُو فَضْلٍ عَظِيمٍ ﴿١٧٤﴾

(१७४) (परिणाम यो भयो कि) उनी अल्लाहको कृपाका साथ फर्के[1] उनीहरूलाई कुनै दुख पुगेन । उनीहरूले अल्लाहको अनुग्रहको मार्ग अपनाए । तथा अल्लाह विशाल अनुकम्पापूर्ण छ ।

إِنَّمَا ذَٰلِكُمُ الشَّيْطَانُ يُخَوِّفُ أَوْلِيَاءَهُ فَلَا تَخَافُوهُمْ وَخَافُونِ إِن كُنتُم مُّؤْمِنِينَ ﴿١٧٥﴾

(१७५) यो शैतान (राक्षस) नै हो जो आफ्ना मित्रहरुबाट तर्साउँछ[2] अत: उनीसित नतर्स, मसित नै तर्स यदि तिमी निष्ठावान हौ ।[3]

وَلَا يَحْزُنكَ الَّذِينَ يُسَارِعُونَ فِي الْكُفْرِ إِنَّهُمْ لَن يَضُرُّوا

(१७६) जो शीघ्रताले कुफ्रमा गइराखेका छन्, उनीसित तपाईं उदासीन नहुनुहोस्, उनी अल्लाह तआ़लाको

---

जसलाई यहाँ ईमानको अधिकतासित तुलना गरिएको छ किनभने ईमान जति दृढ हुनेछ, धर्मयुद्धको साहस तथा संकल्प पनि त्यतिकै अधिक हुनेछ । यो आयत यस कुराको साक्षी छ कि ईमान कुनै अटल विषय होइन । बरु यसमा कमी र अधिकता भइराखेको हुन्छ जस्तो कि मोहद्दिसीनको विचार छ । यो पनि ज्ञात भयो कि दुखमा ईमानवालाहरू अल्लाहमाथि विश्वास र भरोसा गर्दछन् । यसकारण हदीसमा ﴿حَسْبُنَا اللَّهُ وَنِعْمَ الْوَكِيلُ﴾ पढ्नमा जोड दिइएको छ । यसैप्रकार सहीह बुखारी आदिमा छ, आदरणीय इब्राहीम अलैहिस्सलामलाई जब आगोमा हालियो र त्यतिखेर उहाँको मुखमा यिनै शब्द थिए । (फ़तहुल क़दीर)

[1]कृपासित तात्पर्य सुरक्षा छ र दयासित तात्पर्य लाभ छ, जुन सानो बद्रमा ब्यापारद्वारा प्राप्त भयो । नबी सल्लल्लाहु अलैहि वसल्लमले सानो बद्रमा एक गइराखेको समूहबाट ब्यापारको सामग्री क्रय गरी बेचिदिनुभयो, जसबाट लाभ प्राप्त भयो र लाभ उहाँ सल्लल्लाहु अलैहि वसल्लमले मुसलमानहरूमा विभाजित गरिदिनुभयो । (इब्ने कसीर)

[2]अर्थात् त्यो तिमीलाई शंका तथा भ्रममा पार्दछ कि त्यो बडो वीर र बलवान छ ।

[3]अर्थात् यदि त्यो तिमीलाई यसप्रकार भ्रममा पार्दछ भने तिमी ममाथि मात्र भरोसा गर र मतिर नै फर्क ! म तिम्रो लागि पर्याप्त हुनेछु र तिम्रो रक्षक रहनेछु । जस्तो कि अर्को स्थानमा भनिएको छ ।

﴿أَلَيْسَ اللَّهُ بِكَافٍ عَبْدَهُ﴾

"के अल्लाह तआ़ला आफ्ना भक्तहरूको लागि पर्याप्त छैन ?" (अल-जुमर -३६) अलि अरु हेर्नुस् । ﴿كَتَبَ اللَّهُ لَأَغْلِبَنَّ أَنَا وَرُسُلِي﴾ आदि आयत छन् ।

اللهَ شَيْـًٔا ۗ يُرِيدُ اللهُ أَلَّا يَجْعَلَ لَهُمْ حَظًّا فِي الْآخِرَةِ ۖ وَلَهُمْ عَذَابٌ عَظِيمٌ ﴿١٧٦﴾

केही बिगार्न सक्ने छैनन् । अल्लाह परलोकमा उनीहरूलाई कुनै भाग दिन चाहँदैन ।[1] र उनीहरूका लागि घोर यातना छ ।

إِنَّ الَّذِينَ اشْتَرَوُا الْكُفْرَ بِالْإِيمَانِ لَن يَضُرُّوا اللهَ شَيْـًٔا ۖ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿١٧٧﴾

(१७७) कुफ्रलाई ईमानको साटो क्रय गर्नेहरू कहिले अल्लाह (तआ़ला) लाई कुनै हानि पुऱ्याउन सक्दैनन् र उनैको लागि दुखदायी यातना छ ।

وَلَا يَحْسَبَنَّ الَّذِينَ كَفَرُوا أَنَّمَا نُمْلِي لَهُمْ خَيْرٌ لِّأَنفُسِهِمْ ۚ إِنَّمَا نُمْلِي لَهُمْ لِيَزْدَادُوا إِثْمًا ۚ وَلَهُمْ عَذَابٌ مُّهِينٌ ﴿١٧٨﴾

(१७८) काफ़िरहरू यो नसोचून् कि हामीले उनीहरूलाई अवसर दिनु उनको निम्ति राम्रो छ । हामीले यो अवसर यसकारण दिइराखेका छौं कि उनीहरू अझै अधिक पाप गरून् तथा उनैका लागि अपमानजनक यातना छ ।[2]

[1]नबी सल्लल्लाहु अलैहि वसल्लमको आन्तरिक इच्छा थियो कि सबै मानिसहरू मुसलमान भईहालून्, यसैकारण उनीहरूको इन्कार र झुठ्लाउनुबाट उहाँलाई दुख हुन्थ्यो । अल्लाह तआ़लाले यस आयतमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिएको छ कि तपाईं दुखी नहुनुहोस्, यिनीहरूले अल्लाहको केही बिगार्न सक्ने छैनन्, आफ्नै आख़िरत नाश गरिराखेका छन् ।

[2]यस आयतमा अल्लाह तआ़लाबाट समय दिने नियमको वर्णन छ । अर्थात् अल्लाह तआ़ला आफ्नो नियम तथा इच्छाले काफ़िरहरूलाई समय प्रदान गर्दछ । सामयिक रूपले उनीहरूलाई सांसारिक ऐश्वर्य, सुख-समृद्धि, विजय तथा धन तथा सन्तान प्रदान गर्दछ । मानिसहरू ठान्छन् कि उनीमथि अल्लाहको कृपा भइराखेको छ । परन्तु यदि अल्लाहबाट प्रदान गरिएको सुख-समृद्धिबाट लाभान्वित हुनेवाला पुण्य र अल्लाहका आदेशहरुको पालना गर्नुको मार्ग अपनाउँदैनन् भने यो सांसारिक सुख अल्लाह तआ़लाको कृपा होइन, अल्लाहको तर्फबाट समय प्रदान गर्नु हो । जसबाट उनीहरूको अधर्म र अवज्ञामा बढोत्तरी नै हुन्छ । अन्ततः उनी नरकको स्थाई यातनाको अधिकारी हुन्छन् । यस विषयमा अल्लाह तआ़लाले कैयन् स्थानमा वर्णन गरेको छ । जस्तै-

﴿ أَيَحْسَبُونَ أَنَّمَا نُمِدُّهُم بِهِ مِن مَّالٍ وَبَنِينَ ۝ نُسَارِعُ لَهُمْ فِي الْخَيْرَاتِ ۚ بَل لَّا يَشْعُرُونَ ﴾

مَا كَانَ اللّٰهُ لِيَذَرَ الْمُؤْمِنِيْنَ عَلٰى مَآ اَنْتُمْ عَلَيْهِ حَتّٰى يَمِيْزَ الْخَبِيْثَ مِنَ الطَّيِّبِ ۗ وَمَا كَانَ اللّٰهُ لِيُطْلِعَكُمْ عَلَى الْغَيْبِ وَلٰكِنَّ اللّٰهَ يَجْتَبِيْ مِنْ رُّسُلِهٖ مَنْ يَّشَآءُ

(१७९) जुन अवस्थामा तिमी छौ त्यसैमा अल्लाहले निष्ठावान्हरूलाई छाड्ने छैन जबसम्मकि पवित्र र अपवित्रलाई अलग-अलग छुट्याउँदैन ।[1] र न अल्लाह यस्तो छ कि तिमीलाई परोक्षबाट सूचित गरिदेओस,[2] परन्तु अल्लाह आफ्ना रसूलहरू मध्येबाट जसलाई चाहन्छ रोज्दछ ।[3] यसकारण तिमी

"के उनीहरू यो ठान्छन् कि हामी जुन उनीहरूका धन र सन्तानमा बृद्धि गर्दछौं, यो हामी उनको लागि भलाईहरुमा शीघ्रता गरिराखेका छौं, होइन बरु यो उनीहरू बुझ्दै-बुझ्दैनन् ।" (अल-मोमिनून-५५-५६)

[1]यसकारण अल्लाह तआला परीक्षा कुण्डबाट गुजारिराखेको छ, ताकि उसका मित्र प्रष्ट भईहालून् र शत्रु अपमानित भईहालून् । ईमानवाला, धैर्यवान् मुनाफ़िकबाट पृथक भईहालून्, जुनप्रकार वहदमा अल्लाह तआलाले ईमानवालाहरूको परीक्षा लियो जसबाट उनका ईमान धैर्य तथा दृढता र आज्ञा-पालन गर्ने साहसको प्रदर्शन भयो र मुनाफिकहरूका अनुहारमाथि जुन निफ़ाक़ (फूट) को आवरण थियो त्यो खसिहाल्यो ।

[2]अर्थात् यदि अल्लाह तआला यस प्रकारका दुखहरुबाट परीक्षा लिएर मानिसहरूको अवस्था र उनीहरूको बाहिरी र भित्री विचारलाई स्पष्ट गर्दैन भने तिम्रो पासमा कोही अर्न्तयामी त छैन, जसबाट तिमीलाई यी कुराहरूबाट स्पष्ट हुन सकून् र जान्नसक कि को मुनाफ़िक छ र को शुद्ध ईमानवाला ।

[3]परन्तु केही परिस्थितिहरूमा अल्लाह तआला आफ्ना रसूलहरू मध्येबाट जसलाई चाहन्छ परोक्षको ज्ञान गराईहाल्छ । जसबाट कैयन् पटक उनीमाथि अवसरबादीहरू र तिनका दशा तथा तिनका चालहरुको भेद खुलिहाल्छ । परन्तु सामान्यरूपले नबी पनि (यदि अल्लाह तआला चाहँदैन भने) मुनाफ़िकहरूका आन्तरिक निफ़ाक़ (द्वयवाद) र उनीहरूको धोखावाजीबाट अन्जान नै रहन्छ (जुनप्रकार सूरः तौबाको आयत संख्या १०१ मा अल्लाह तआलाको आदेश भएको छ कि गवाँर र मदीनावालाहरूमा जो द्वयवादी छन्, हे पैग़म्बर ! तपाईं उनलाई जान्नुहुन्न, हामी उनीहरूलाई जान्दछौं ।) यसको दोस्रो अर्थ यो हो कि परोक्षको ज्ञान हामी केवल आफ्ना रसूलहरूलाई नै प्रदान गर्दछौं किनभने यो उनको पदको आवश्यकता हो । यसै अल्लाहको प्रकाशना तथा परोक्षद्वारा नै उनी मानिसहरूलाई अल्लाह तआलातिर बोलाउँदछन् र आफूलाई अल्लाहको रसूल सिद्ध गर्दछन् । यस विषयलाई दोस्रो स्थानमा यसप्रकार वर्णित गरिएको छ

﴿عٰلِمُ الْغَيْبِ فَلَا يُظْهِرُ عَلٰى غَيْبِهٖٓ اَحَدًا ۞ اِلَّا مَنِ ارْتَضٰى مِنْ رَّسُوْلٍ﴾

فَاٰمِنُوْا بِاللّٰهِ وَرُسُلِهٖ ۚ وَاِنْ تُؤْمِنُوْا وَتَتَّقُوْا فَلَكُمْ اَجْرٌ عَظِيْمٌ ﴿١٧٩﴾

अल्लाह (तआ़ला) माथि र त्यसका रसूलहरूमाथि विश्वास राख, यदि तिमी ईमान स्थापित गर्दछौं र अल्लाहसित पर हेजगारी गर्दछौं, त तिम्रो लागि निकै ठूलो प्रतिफल छ ।

وَلَا يَحْسَبَنَّ الَّذِيْنَ يَبْخَلُوْنَ بِمَآ اٰتٰىهُمُ اللّٰهُ مِنْ فَضْلِهٖ هُوَ خَيْرًا لَّهُمْ ؕ بَلْ هُوَ شَرٌّ لَّهُمْ ؕ سَيُطَوَّقُوْنَ مَا بَخِلُوْا بِهٖ يَوْمَ الْقِيٰمَةِ ؕ وَلِلّٰهِ مِيْرَاثُ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ﴿١٨٠﴾

(१८०) तथा जसलाई अल्लाहले आफ्नो कृपाबाट (धन) दिएको छ र उनी त्यसमा कंजुसी (कृपणता) गर्दछन् भने यसलाई र म्रो नठानून् बरु त्यो उनको लागि अति नराम्रो छ । उनीहरूले जुन (धन) मा कंजुसी गरेका छन्, प्रलयको दिन उनीहरूका (घाँटीका) तौक (पासो) हुनेछ,[1] तथा आकाशहरू एवं धर्तीको उत्तराधिकार मात्र अल्लाहको लागि छ, तथा त्यो तिम्रा क्रियाकलापबाट अवगत छ ।

لَقَدْ سَمِعَ اللّٰهُ قَوْلَ الَّذِيْنَ قَالُوْٓا اِنَّ اللّٰهَ فَقِيْرٌ وَّنَحْنُ اَغْنِيَآءُ ۘ

(१८१) अवश्य अल्लाहले ती मानिसहरूका कुरा सुनेको छ जसले भने कि अल्लाह निर्धन

---

"परोक्षको ज्ञान (अल्लाह तआ़लालाई छ) र आफ्नो परोक्षबाट प्रिय रसूलहरूलाई नै अवगत गराउँछ ।" (सूरः अल-जिन्न-२६-२७)

स्पष्ट कुरो छ कि यी परोक्षका कुराहरु ती नै हुन्, जसको सम्बन्ध दूतत्वको पद तथा कर्तब्य पूरा गर्नाले हुन्छ न कि (ما كان وما يكون) (जे-जति भइसक्यो र अगाडी क़ेयामतसम्म हुनेवाला छ) को ज्ञान । जस्तो कि केही गलत मानिसहरू यसप्रकारको परोक्षको ज्ञान नबीहरूको लागि र केही आफ्ना "पुण्य आत्मा इमामहरू" का लागि भन्दछन् ।

[1]यसमा त्यस कन्जुसको वर्णन गरिएको छ, जो अल्लाहबाट प्रदान गरिएको धनलाई अल्लाहको मार्गमा व्यय गर्दैन यहाँसम्मकि त्यसमध्येबाट अनिवार्य ज़कात पनि दिदैन । सहीह बुखारी हदीसमा आउँछ कि कयामतका दिन त्यसको धनलाई एक विषालु शर्प बनाएर जंजीर जस्तै त्यसको घाँटीमा पहिराईन्छ, त्यो शर्प त्यसको बाँछहरू समात्नेछ र भन्नेछ कि म तेरो धन हूँ ।

مَن آتَاهُ اللهُ مَالاً فَلَمْ يُؤَدِّ زَكوتَهُ، مُثِّلَ لَهُ شُجَاعاً أَقْرَعَ، لَهُ زَبِيبَتَانِ ، يُطَوَّقُهُ يَوْمَ القِيَامةِ

(सहीह बुखारी किताब अल तफ़सीर)

سَنَكْتُبُ مَا قَالُوا وَقَتْلَهُمُ الْأَنْبِيَاءَ بِغَيْرِ حَقٍّ وَنَقُولُ ذُوقُوا عَذَابَ الْحَرِيقِ ﴿١٨١﴾

छ तथा हामी धनी छौं ।[1] हामी उनीहरूको यो कुरा लेख्नेछौं तथा उनीहरूद्वारा ईशदूतहरूको अवैध हत्यालाई पनि,[2] तथा हामी भन्नेछौं कि पोलिनुको यातना चाख ।

ذَٰلِكَ بِمَا قَدَّمَتْ أَيْدِيكُمْ وَأَنَّ اللَّهَ لَيْسَ بِظَلَّامٍ لِلْعَبِيدِ ﴿١٨٢﴾

(१८२) यी तिम्रा करतूत हुन् तथा निश्चय अल्लाह आफ्ना भक्तहरूमाथि अलिकति पनि अत्याचार गर्दैन ।

الَّذِينَ قَالُوا إِنَّ اللَّهَ عَهِدَ إِلَيْنَا أَلَّا نُؤْمِنَ لِرَسُولٍ حَتَّىٰ يَأْتِيَنَا بِقُرْبَانٍ تَأْكُلُهُ النَّارُ قُلْ قَدْ جَاءَكُمْ رُسُلٌ مِنْ قَبْلِي بِالْبَيِّنَاتِ وَبِالَّذِي قُلْتُمْ فَلِمَ قَتَلْتُمُوهُمْ إِنْ كُنْتُمْ صَادِقِينَ ﴿١٨٣﴾

(१८३) यिनीहरूले भने कि हामीसित अल्लाहले वचन लिएको छ कि हामी कुनै ईशदूतलाई नमानौं जवसम्मकि त्यो हाम्रो साम् यस्तो बलि नल्याओस् जसलाई आगोले खाओस्, तपाई भन्नुस् कि तिम्रो पासमा म भन्दा पूर्व कैयन् ईशदूतहरू खुल्ला लक्षणहरू लिएर आइसकेका छन् । जुन त्यो कुरा पनि जसका लागि तिमीहरू भनिराखेका छौ र यदि तिमी साँचो हौ भने उनीहरूलाई किन हत गऱ्यौ[3] यदि तिमी सत्यवादी हौ भने ।

[1]जब अल्लाह तआ़लाले ईमानवालाहरूलाई अल्लाह तआ़लाको मार्गमा व्यय गर्न प्रलोभन दियो र भन्यो :

﴿ مَنْ ذَا الَّذِي يُقْرِضُ اللَّهَ قَرْضًا حَسَنًا ﴾

"को छ जो अल्लाहलाई राम्ररी ऋण दिन्छ ।" (अल-बक़र:-२४५)

तब यहूदीहरूले भने हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) ! तेरो प्रभु निर्धन भइहालेको छ जसले गर्दा भक्तहरूबाट ऋण माँगिराखेको छ, जसमाथि अल्लाह तआ़लाले यो ऋण उतात्यो । (इब्ने कसीर)

[2]अर्थात् वर्णित कथन जसमा अल्लाह तआ़लालाई अपमानजनक शब्द भनिएका छन् । र यसैप्रकार उनका (पूर्वजहरूको) नबीहरूको अकारण हत्या गर्नु, उनीहरूका यी सबै अपराध अल्लाहको सदनमा लेखिएका छन् । जसको कारण उनीहरू नर्कको अग्निमा हालिनेछन् ।

[3]यसमा पनि यहूदीहरूको एउटा अरु कुरोलाई झुठ्ल्याइँदैछ । उनी भन्दथे कि अल्लाह तआ़लाले हामीसित वचन लिएको छ कि तिमी केवल त्यस रसूलमाथि विश्वास गर्नु जसको प्रार्थनाले आकाशबाट आगो उत्रोस र बलि तथा दानलाई जलाईयोस् । उनीहरूको तात्पर्य यो थियो कि हे मुहम्मद ! (सल्लल्लाहु अलैहि

فَإِنْ كَذَّبُوكَ فَقَدْ كُذِّبَ رُسُلٌ مِّن قَبْلِكَ جَاءُو بِالْبَيِّنَٰتِ وَالزُّبُرِ وَالْكِتَٰبِ الْمُنِيرِ ﴿١٨٤﴾

(१८४) तैपनि यदि यिनीहरू तपाईंलाई झुठ्लाउँछन्, त तपाईंभन्दा पूर्व धेरैजसो रसुलहरू झुठ्लाइए, जो आफ्ना साथमा स्पष्ट प्रमाण, पत्रक तथा प्रकाशमान पुस्तकहरू लिएर आए ।[1]

كُلُّ نَفْسٍ ذَآئِقَةُ الْمَوْتِ ۗ وَإِنَّمَا تُوَفَّوْنَ أُجُورَكُمْ يَوْمَ الْقِيَٰمَةِ ۖ فَمَن زُحْزِحَ عَنِ النَّارِ وَأُدْخِلَ الْجَنَّةَ فَقَدْ فَازَ ۗ وَمَا الْحَيَوٰةُ الدُّنْيَآ إِلَّا مَتَٰعُ الْغُرُورِ ﴿١٨٥﴾

(१८५) प्रत्येक जीवले मृत्युको स्वाद चाख्नु नै छ र केयामतका दिन तिमी आफ्ना प्रतिकार पूरा-पूरा दिइनेछौ, परन्तु जो व्यक्ति आगोबाट हटाइयो र स्वर्गमा प्रवेश गराईयो, निःसन्देह त्यो सफल भयो । र संसारको जीवन केवल धोका समान हो ।[2]

वसल्लम) तपाईंद्वारा यसप्रकारको चमत्कार प्रकट भएको छैन । यसकारण अल्लाहको आदेशानुसार तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) को रिसालतमा हामीलाई ईमान ल्याउनु आवश्यक छैन यद्यपि पूर्वका नबीहरू मध्येबाट केही नबीहरूको प्रार्थनामा आकाशबाट आगो आउँथ्यो र ईमानवालाहरूको दान र बलिलाई खाइदिन्थ्यो जुन एकातिर यस कुराको प्रमाण हुन्थ्यो कि अल्लाहको मार्गमा प्रस्तुत गरिएको दान अथवा बलि अल्लाह तआलाको दरबारमा स्वीकार भइहाल्यो । अर्कोतिर यो सिद्ध गर्थ्यो कि यी नबी सत्य छन् । परन्तु यी यहूदीरहरूले ती नबी र रसूलहरूलाई पनि झुठ्लाए यसकारण अल्लाह तआलाको आदेश भयो कि यदि तिमी आफ्नो दाबीमा साँचो छौ भने तिमीले यस्तो पैग़म्बरलाई किन झुठ्लायौ र उनको हत्या गर्‍यौ, जो तिमीद्वारा माँगिएका निशानीहरू लिएर आएका थिए ।

[1]नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिइँदैछ कि तपाईं यहूदीहरूको तर्क-वितर्कबाट उदास नहुनुहोस् । यसप्रकारको व्यवहार केवल तपाईंसित गरिराखिएको छैन, परन्तु तपाईंभन्दा पूर्व आएका पैग़म्बरहरूसँग पनि यही गरिसकिएको छ ।

[2]यस आयतमा एउटा अटल तथ्यको वर्णन छ कि मृत्युबाट कोही भाग्न सक्दैन । दोस्रो यो कि संसारमा जसले पनि राम्रो वा नराम्रो जे-जति गरेको छ, त्यसलाई त्यसको पूरा-पूरा प्रतिफल दिइनेछ । तेस्रो, सफलताको सीमा भनिएको छ, कि सफल वास्तवमा त्यो छ जो संसारमा रहेर आफ्नो प्रभुलाई प्रसन्न गरिहाल्यो जसको परिणामस्वरूप त्यो नर्कबाट मुक्त गरियो र स्वर्गमा प्रवेशित गराइयो । चौथो यो कि संसारको जीवन धोकाको सामग्री हो, जो त्यसबाट पन्छिएर हिंडिहाल्यो, त्यो सौभाग्यशाली छ र जो त्यसमा फँसिहाल्यो, असफल र हतभागा छ ।

لَتُبْلَوُنَّ فِيٓ أَمْوَٰلِكُمْ وَأَنفُسِكُمْ وَلَتَسْمَعُنَّ مِنَ ٱلَّذِينَ أُوتُوا۟ ٱلْكِتَٰبَ مِن قَبْلِكُمْ وَمِنَ ٱلَّذِينَ أَشْرَكُوٓا۟ أَذًى كَثِيرًا ۚ وَإِن تَصْبِرُوا۟ وَتَتَّقُوا۟ فَإِنَّ ذَٰلِكَ مِنْ عَزْمِ ٱلْأُمُورِ ﴿١٨٦﴾

(१८६) अवश्य तिम्रा धन र आत्माहरुमा तिम्रो परीक्षा लिइनेछ।[1] र अवश्य तिमीलाई ती मानिसहरूको जो तिमीभन्दा पूर्व किताब दिइए र मूर्तिपूजकहरूको धेरै दुख दिने कुराहरु सुन्नु पर्नेछ र यदि तिमी धैर्य राख्दछौ र आज्ञाको पालना गर्दछौ भने अवश्य यो धेरै ठूलो साहसको कार्य हो।[2]

[1]ईमानवालाहरूको ईमान अनुसार परीक्षा लिनुको वर्णन छ। जस्तो कि सूरः अल-बक्राको आयत संख्या १५५ मा वर्णन गरिसकिएको छ। यस आयतको व्याख्यामा एउटा घटनाको वर्णन आउँछ कि मुनाफ़िकहरूको मुखिया अब्दुल्लाह बिन उबैय्ले अझै इस्लाम स्वीकार गरेको घोषणा गरेका थिएनन् र बद्रको युद्ध पनि भएको थिएन कि नबी सल्लल्लाहु अलैहि वसल्लम आदरणीय साद बिन उबादः बिरामी भएको बेला भेट्नलाई बनी हारिस बिन ख़जरजमा पुग्नु भयो। मार्गमा एक ठाउँमा यहूदी, मूर्तिपूजक र अब्दुल्लाह बिन उबैय्य आदि बसिराखेका थिए। तपाईंको सवारीबाट जुन धुलो उडेको थियो, त्यसले त्यसबाट पनि अप्रसन्नताको प्रदर्शन गऱ्यो। र उहाँ सल्लल्लाहु अलैहि वसल्लमले एकछिन पर्खि उनलाई इस्लाम धर्म स्वीकार गर्न आमन्त्रण पनि दिनुभयो, जसमाथि अब्दुल्लाह बिन उबैय्यले अपशब्द पनि भन्यो। त्यहाँ केही मुसलमान थिए। उनीहरूले यसको विपरीत उहाँको प्रशंसा गरे, अवस्था यस्तो थियो कि उनीहरूमध्ये झगडा भइहाल्छ। उहाँ सल्लल्लाहु अलैहि वसल्लमले उनी सबैलाई शान्त गराउनु भयो। त्यसपछि उहाँ सल्लल्लाहु अलैहि वसल्लम आदरणीय साद छेउ पुग्नुभयो अनि यो घटना सुनाउनु भयो, जसमाथि उनले यो भने कि अब्दुल्लाह बिन उबैय्य यी कुरा यसकारण गर्दछ कि तपाईं मदीना आउनुभन्दा पहिला यहाँका निवासीहरूले उसको राजतिलक गर्नु थियो, तपाईं आइपुग्नुको कारणले त्यसको नाइकेपनाको यो सुन्दर सपना अँधुरो नै रहयो, जसको बारेमा त्यसलाई अति दुख छ र त्यसका यी कुरा त्यसको यसै कटुता तथा शत्रुताको प्रदर्शन हो, यसकारण त्यसलाई क्षमा गरेर नै काम लिनुस। (सहीह बुख़ारी किताबुल तफ़सीर संक्षिप्त)

[2]अहले किताबसित तात्पर्य यहूदी तथा इसाई हुन्। यिनीहरू नबी सल्ललाहु अलैहि वसल्लम, इस्लाम र मुसलमानहरूका विरुद्ध अपशब्द तथा दुष्प्रचार गर्दथे। यही अवस्था अरबका मूर्तिपूजकहरूको थियो। यिनका अतिरिक्त मदीनामा आइसके पश्चात मुनाफ़िक विशेषरूपले तिनको मुखिया अब्दुल्लाह बिन उबैय्य पनि तपाईंको मान-मर्यादामाथि प्रहार गर्दथ्यो। उहाँ सल्लल्लाहु अलैहि वसल्लम मदीना आउनुभन्दा पूर्व मदीनावासी त्यसलाई आफ्नो सरदार बनाउनेवाला थिए, र त्यसको राजतिलकको तयारी पूर्ण भइसकेको थियो यसै बीच उहाँ सल्लल्लाहु अलैहि वसल्लम आउनाले त्यसको स्वप्न टुटिहाल्यो, जसको त्यसलाई अत्याधिक दुख थियो, यसरी त्यो प्रतिशोधको भावनाको कारण त्यो उहाँको विरुद्ध अपमान र निन्दा गर्न कुनै कसर बाँकी राख्दैनथ्यो।

وَإِذْ أَخَذَ اللَّهُ مِيثَاقَ الَّذِينَ أُوتُوا الْكِتَابَ لَتُبَيِّنُنَّهُ لِلنَّاسِ وَلَا تَكْتُمُونَهُ فَنَبَذُوهُ وَرَاءَ ظُهُورِهِمْ وَاشْتَرَوْا بِهِ ثَمَنًا قَلِيلًا ۖ فَبِئْسَ مَا يَشْتَرُونَ ﴿١٨٧﴾

(१८७) र जब अल्लाह (तआला) ले अहले किताबसित वचन लियो कि तिमी त्यसलाई सबै मानिसहरूसित अवश्य वर्णन गर्नेछौ र त्यसलाई लुकाउने छैनौ, त तैपनि उनीहरूले त्यस वचनलाई बेवास्ता गरिदिए र त्यसलाई अत्यन्त कम मूल्यमा बेचिदिए, उनीहरूको यो व्यापार साह्रै नराम्रो छ ।[1]

لَا تَحْسَبَنَّ الَّذِينَ يَفْرَحُونَ بِمَا أَتَوا وَّيُحِبُّونَ أَن يُحْمَدُوا بِمَا لَمْ يَفْعَلُوا فَلَا تَحْسَبَنَّهُم بِمَفَازَةٍ مِّنَ الْعَذَابِ ۖ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿١٨٨﴾

(१८८) ती मानिसहरू जो आफ्ना कर्तुतमाथि (क्रियाकलापहरू) प्रसन्न छन् र चाहन्छन् कि जुन उनीहरूले गरेनन्, त्यसमा पनि उनीहरूको प्रशंसा गरियोस् । तपाईंले उनीहरूलाई यातनाबाट मुक्त नठान्नुहोस् । उनीहरूका लागि त कष्टदायी यातनाहरू छन् ।[2]

(जस्तो कि बुखारीको सन्दर्भले यसको आवश्यक विवरण पछिल्लो स्तम्भमा गुज्रिसकेको छ) । यस स्थितिमा मुसलमानहरूलाई क्षमा गर्नु तथा धैर्य राख्नुको शिक्षा दिइराखिएको छ । जसबाट ज्ञात भयो कि इस्लामको आमन्त्रण दिनेवालाहरूलाई दुख र कठिनाईहरू हुनु यस सत्यमार्गको अटल परिस्थिति मध्येबाट छ र यसको उपचार धैर्य अल्लाहको लागि, दृढताको निम्ति अल्लाहको सहायताको कामना र अल्लाहतिर सम्बोधित हुनुको अतिरिक्त केही पनि छैन । (इब्ने कसीर)

[1]यसमा अहले किताबलाई रोकिएको तथा निन्दा गरिंदैछ कि उनीहरूसित अल्लाह तआलाले जुन वचन लिएको थियो कि अल्लाहको किताब (तौरात र इंजील) मा जे कुरा लेखिएको छन् र अन्तिम नबीका जुन गुणहरुको वर्णन छ, तिनलाई मानिसहरू समक्ष वर्णन गर्छन् र लुकाउने छैनन् परन्तु उनीहरूले सांसारिक लाभको लागि अल्लाह तआलालाई दिइएको वचन भङ्ग गरिदिए अर्थात् यो ज्ञानीहरूलाई चेतावनी दिइराखिएको छ कि उनीहरूसित जुन लाभदायक ज्ञान छ, जसबाट मानिसहरूको विश्वास तथा कर्महरुको सुधार हुनसक्छ, त्यो मानिसहरूसम्म अवश्य पुऱ्याउनु पर्छ। सांसारिक लोभ र लाभका निम्ति तिनलाई लुकाउनु साह्रै ठूलो अपराध हो । प्रलयका दिन यस्ता मानिसहरूलाई आगोको लगाम पहिऱ्याइने छ। (जस्तो कि हदीसमा छ)

[2]यसमा यस्ता मानिसहरूलाई कठोर चेतावनी दिइराखिएको छ जो मात्र आफ्नो सामयिक पराक्रमहरूमाथि प्रसन्न हुँदैनन्, बरु यो पनि चाहन्छन् कि उनको खातामा ती कुराहरु पनि लेखिऊन् अथवा प्रकाशित गरियून् जुनकि उनीहरूले गरेका छैनन्। यो रोग तपाईं सल्लल्लाहु अलैहि वसल्लको युगमा केही मानिसहरूमा थियो, यसकारण यो आयत उत्रयो । त्यस्तै रोग वर्तमान युगका चाकडी

وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَاللّٰهُ عَلٰى كُلِّ شَىْءٍ قَدِيْرٌ ۝

(१८९) र आकाशहरू र धर्तीको मालिक अल्लाह (तआ़ला) नै हो। र अल्लाह तआ़ला हरेक कुरोमा प्रभुत्व राख्दछ।

اِنَّ فِىْ خَلْقِ السَّمٰوٰتِ وَالْاَرْضِ وَاخْتِلَافِ الَّيْلِ وَالنَّهَارِ لَاٰيٰتٍ لِّاُولِى الْاَلْبَابِ ۝

(१९०) निःसन्देह आकाशहरू र धर्तीलाई बनाउनमा र रात-दिनको परिवर्तनमा अवश्य बुद्धिमानहरुका लागि निशानीहरू छन्।[1]

الَّذِيْنَ يَذْكُرُوْنَ اللّٰهَ قِيٰمًا وَّقُعُوْدًا وَّعَلٰى جُنُوْبِهِمْ وَيَتَفَكَّرُوْنَ فِىْ خَلْقِ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ رَبَّنَا مَا خَلَقْتَ هٰذَا بَاطِلًا ۚ سُبْحٰنَكَ فَقِنَا عَذَابَ النَّارِ ۝

(१९१) जो अल्लाह (तआ़ला) को सम्झना उभेर र बसेर तथा आफ्ना कोल्टो परेको अवस्थामा गर्दछन् र आकाशहरू र धर्तीको सृष्टिमाथि विचार गर्दछन् (र भन्दछन्) कि हे हाम्रो प्रभु ! तिमीले यो सबै बिना लाभको बनाएका छैनौ।

रुचाउने मानिसहरू तथा प्रचार एवं हतकण्डा बनेका नेताहरूमा पनि सामान्य छ। वर्णनको आगामी क्रमबाट यो पनि विदित हुन्छ कि यहूदी अल्लाहको किताबलाई परिवर्तन तथा घटाउने-बढाउने कुराको अपराधी थिए। तर उनी आफ्ना यी क्रियाकलापहरूबाट प्रसन्न हुने गर्थे। यही दशा आजकलका झुठा गिरोहहरूको पनि छ। उनीहरू पनि मानिसहरूलाई कुपथ गरेर तथा भ्रमित पारेर अल्लाहका आयतहरूको अर्थमा एवं ढाँटेर प्रसन्न हुन्छन् र दाबी यो गर्दछन् कि तिनै सत्यमा छन् र यो कि उनको धूर्तता एवं छलकपट उनको प्रशंसा गरियोस्।

[1]अर्थात् जुन मानिसहरू धर्ती र आकाशको रचना विश्वका अन्य भेद र रहस्यमा विचार गर्दछन्, उनीहरूलाई जगत्को रचयिता एवं वास्तविक शासकको ज्ञान हुन्छ। र उनी बुझिहाल्छन् कि यति विशाल जगत्को व्यवस्थामा अलिकति पनि बाधा उत्पन्न हुँदैन, निश्चय त्यसको पछाडी कोही एक चालक तथा व्यवस्थापक छ र त्यो अल्लाह हो। अगाडी यिनै बुद्धिमानीहरूको वर्णन छ कि उनी उठ्दा-बस्दा र कोल्टो फेरेको अवस्थामा अल्लाहलाई स्मरण गर्दछन्। हदीसमा आउँछ कि ﴿إِنَّ فِي خَلْقِ السَّمٰوَاتِ﴾ बाट सूर:को अन्त्यसम्म यी आयतहरू नबी करीम सल्लल्लाहु अलैहि वसल्लम राती जब तहज्जुदको नमाज़ पढ्नको लागि उठ्नु हुन्थ्यो र त्यस पश्चात वुज़ू गर्नुहुन्थ्यो। (सहीह बुखारी, किताबुल तफ़सीर सहीह मुस्लिम किताबुस्सलात ३/१८२)

तिमी पवित्र छौ, तसर्थ तिमी हामीलाई आगोको यातनाबाट बचाउ ।[1]

(१९२) हे हाम्रो पालनकर्ता ! तिमी जसलाई नरकमा प्रवेश गरायो, निःसन्देह तिमीले त्यसलाई अपमानित गऱ्यौ र अत्याचारीहरूको सहायक कोही छैन ।

رَبَّنَآ إِنَّكَ مَن تُدۡخِلِ ٱلنَّارَ فَقَدۡ أَخۡزَيۡتَهُۥۖ وَمَا لِلظَّٰلِمِينَ مِنۡ أَنصَارٖ ﴿١٩٢﴾

(१९३) हे हाम्रा प्रभु ! हामीले सुन्यौं कि उद्घोषक ईमानतिर पुकारिराखेको छ कि मानिसहरू ! आफ्नो प्रभुमाथि विश्वास गर, र हामीले विश्वास गऱ्यौं । हे हाम्रा प्रभु ! अब त हाम्रो पाप क्षमा गरिदेउ र हाम्रा नराम्रा कुरा हामीबाट हटाइदेउ र हाम्रो मृत्यु सदाचारीहरूको साथमा गर ।

رَّبَّنَآ إِنَّنَا سَمِعۡنَا مُنَادِيٗا يُنَادِي لِلۡإِيمَٰنِ أَنۡ ءَامِنُواْ بِرَبِّكُمۡ فَـَٔامَنَّاۚ رَبَّنَا فَٱغۡفِرۡ لَنَا ذُنُوبَنَا وَكَفِّرۡ عَنَّا سَيِّـَٔاتِنَا وَتَوَفَّنَا مَعَ ٱلۡأَبۡرَارِ ﴿١٩٣﴾

[1]यी दस आयतहरूमध्ये पहिलो आयतमा अल्लाह तआलाले आफ्नो बल एवं सामर्थ्यका केही लक्षणहरुको चर्चा गरेको छ र आदेश गरेको छ कि यी अवश्य निशानीहरू हुन्, परन्तु कसका लागि ? बुद्धिमान र ज्ञानीहरूका लागि अर्थात् यसको तात्पर्य यो भयो कि रचनाको चमत्कार तथा त्यसको सामर्थ्यलाई देखेर पनि जसलाई ईश्वर (अल्लाह) को ज्ञान हुँदैन त्यो ज्ञानहीन छ, तर यो खेदको विषय छ कि इस्लामी जगत्मा त्यसैलाई ज्ञानी मानिन्छ, जो अल्लाह तआलाको विषयमा शंकाका शिकार हुन्छ, فإنا لله وإنا إليه راجعون दोस्रो आयतमा ज्ञानीहरूलाई अल्लाहको स्मरणबाट अभिरुचि तथा आकाश एवं पृथ्वीको रचनामा सोच-विचारको वर्णन छ, जस्तो कि हदीसमा पनि आएको छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो उभेर नमाज़ पढ, यदि उभिन सक्दैनौं भने बसेर पढ, यदि बसेर पढ्न सक्दैनौं भने कोल्टो परेर पढ । (सहीह बुख़ारी किताबुस्सलात) यस्ता मानिसहरू जो अल्लाहलाई हरेक समय स्मरण गर्दछन् र आकाश र धर्तीको रचनामा ध्यान-विचार गर्दछन्, जसबाट रचयिताको महिमा, शक्ति, त्यसको कृपा एवं प्रभुत्वको उनीहरूलाई सही दिशा प्राप्त हुन्छ । तसर्थ उनी पुकार गर्दछन् कि सृष्टिको प्रभुले यो सृष्टि त्यसै अकारण बनाएको छैन, बरु यसको उद्देश्य भक्तहरूको परीक्षा लिनु हो । जो सफल भइहाल्यो, त्यसको लागि अनन्त कालसम्मको निम्ति स्वर्गको सुख-सुविधा छ र जो असफल भइहाल्यो त्यसलाई अग्निको यातना छ । यसकारण उनीहरू आगोको यातनाबाट बाँच्न प्रार्थना पनि गर्दछन् । यसपश्चात आउने तीन आयतहरुमा पनि क्षमा-याचना तथा प्रलयको दिनको अपमानबाट बाँच्नका लागि प्रार्थनाहरू छन् ।

رَبَّنَا وَاٰتِنَا مَا وَعَدْتَّنَا عَلٰى رُسُلِكَ وَلَا تُخْزِنَا يَوْمَ الْقِيٰمَةِ ۗ اِنَّكَ لَا تُخْلِفُ الْمِيْعَادَ ﴿١٩٤﴾

(१९४) हे हाम्रा प्रभु ! हामीलाई त्यो प्रदान गर जसको वचन तिमीले हामीसित आफ्ना रसूलहरूका मुखबाट गरेका छौ र हामीलाई क़ेयामतका दिन अपमनित नगर, नि:सन्देह तिमी वचन विपरीत गर्दैनौ ।

فَاسْتَجَابَ لَهُمْ رَبُّهُمْ اَنِّيْ لَآ اُضِيْعُ عَمَلَ عَامِلٍ مِّنْكُمْ مِّنْ ذَكَرٍ اَوْ اُنْثٰى ۚ بَعْضُكُمْ مِّنْۢ بَعْضٍ ۚ فَالَّذِيْنَ هَاجَرُوْا وَاُخْرِجُوْا مِنْ دِيَارِهِمْ وَاُوْذُوْا فِيْ سَبِيْلِيْ وَقٰتَلُوْا وَقُتِلُوْا لَاُكَفِّرَنَّ عَنْهُمْ سَيِّاٰتِهِمْ وَلَاُدْخِلَنَّهُمْ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۚ ثَوَابًا مِّنْ عِنْدِ اللّٰهِ ۗ وَاللّٰهُ عِنْدَهٗ حُسْنُ الثَّوَابِ ﴿١٩٥﴾

(१९५) अत: उनीहरूको पालनकर्ताले उनको प्रार्थना स्वीकार गर्‍यो ।[१] कि तिमीमध्ये कुनै कार्यकर्ताका कर्महरुलाई चाहे त्यो पुरुषमा होस् अथवा स्त्रीमा कहिल्यै विफल पार्दैन ।[२] तिमी आपसमा एक-अर्कासित सम्बद्ध हौ ।[३] यसकारण उनीहरू जसले हिज़रत (धर्मको कारण स्थानान्तरण) गरे र आफ्ना घरहरुबाट निष्काशित गरिए र जसलाई मेरो मार्गमा कष्ट दिइयो र जसले धर्मयुद्ध गरे र शहीद गरिए, म अवश्य उनका नराम्रा कुरा उनीबाट हटाइदिनेछु र अवश्य उनलाई त्यस स्वर्गमा लैजानेछु जसमा

[१] (فاستجاب) यहाँ (أجاب) अर्थात् स्वीकार गर्‍यो को अर्थमा प्रयोग भएको छ ।

[२] पुरुष होस् या स्त्री यसकारण वर्णन गरिएको छ कि इस्लामले केही कर्महरुमा पुरुष-स्त्रीको मध्ये उनीहरूको एक-अर्कासित प्राकृतिक भिन्नता र गुणहरुको आधारमा अन्तर गरिएको छ। जस्तै संरक्षण तथा अधिपत्यमा, जीविका उपार्जनमा धर्मयुद्धमा भाग लिनमा र उत्तराधिकारमा आधा भाग पाउनुमा । यसबाट यो अर्थ निकाल्न सकिन्छ कि पुण्य कर्महरुको प्रत्युपकारमा पनि सायद पुरुष स्त्रीमा केही अन्तर गरिनेछ। होइन, यस्तो हुने छैन । प्रत्येकलाई समान प्रतिफल प्राप्त हुनेछ, त्यही पुण्य यदि एउटा स्त्री गर्छे भने त्यसलाई पनि त्यही प्रतिफल प्राप्त हुनेछ ।

[३] यो वाक्य अलग छ र यसको अभिप्राय उपरोक्त बिन्दुको अभिप्राय हो अर्थात् प्रतिफल एवं आज्ञापालनमा तिमी नर-नारी एकै हौ अर्थात् एक समान हो, केही हदीसहरुमा छ कि आदरणीय उम्मे सलमाले एक पटक भन्नुभयो कि हे अल्लाहका रसूल ! अल्लाहले हिज़रत (धर्मको लागि प्रवास) को विषयमा नारीहरूको नाम लिनु भएन, त्यसमाथि यो आयत उत्र्यो (तफ़सीर तबरी, इब्ने क़सीर, तथा फ़तहुल क़दीर)

नहरहरू बगिराखेका छन्, यो हो पुण्य अल्लाह (तआ़ला) को तर्फबाट र अल्लाह (तआ़ला) कै पासमा श्रेष्ठ प्रत्युपकार छ ।

لَا يَغُرَّنَّكَ تَقَلُّبُ الَّذِيْنَ كَفَرُوْا فِي الْبِلَادِ ﴿١٩٦﴾

(१९६) नगरहरुमा काफि़रहरूको यातायातले मलाई धोकामा नपारिदेओस् ।[1]

مَتَاعٌ قَلِيْلٌ ثُمَّ مَأْوٰىهُمْ جَهَنَّمُ وَبِئْسَ الْمِهَادُ ﴿١٩٧﴾

(१९७) यो त थोरै सुख सामग्री हो ।[2] अनि त्यसको पश्चात उनको ठेगाना त नरक हो र त्यो नराम्रो स्थान हो ।

[1] यद्यपि सम्बोधित नबी सल्लल्लाहु अलैहि वसल्लमलाई गरिएको छ, तर सम्बोधित सम्पूर्ण उम्मत छ । शहरहरूमा यातायातसित तात्पर्य ब्यापारको लागि एउटा शहरबाट अर्को शहर अथवा एक देशबाट अर्को देश जानु हो । यो ब्यापारिक यात्रा सांसारिक साधनहरुको अधिकता तथा ब्यापारिक क्षेत्रको विस्तारको प्रमाण हो । अल्लाह तआ़ला आदेश गर्छ कि यो सबै अस्थायी तथा केही दिनको लागि लाभ हो । यसबाट ईमानवालाहरू धोकामा पर्नु हुँदैन । वास्तविक परिणामलाई दृष्टिमा राख्नुपर्छ, जुन ईमान नहुनुको कारण नरकको स्थाई यातना हो । जसमा यी सांसारिक धन-साधनले परिपूर्ण काफिरहरू पर्नेछन् । यस विषयलाई अन्य कैयौं स्थानहरूमा पनि वर्णन गरिएको छ । जस्तै

﴿مَا يُجَادِلُ فِيْٓ اٰيٰتِ اللّٰهِ اِلَّا الَّذِيْنَ كَفَرُوْا فَلَا يَغْرُرْكَ تَقَلُّبُهُمْ فِي الْبِلَادِ﴾

"अल्लाहका आयतहरुमा तिनै झगडा गर्दछन् जो काफ़िर छन्, तर उनीहरूको शहरहरुमा हिंड्डुल गर्नु तपाईंलाई धोकामा नपारोस् । (अल-मोमिन-४)

﴿اِنَّ الَّذِيْنَ يَفْتَرُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ لَا يُفْلِحُوْنَ ☆ مَتَاعٌ فِي الدُّنْيَا ثُمَّ اِلَيْنَا مَرْجِعُهُمْ﴾

"नि:सन्देह जुन मानिसहरू अल्लाहमाथि मिथ्यारोपण गर्दछन्, उनीहरू सफल हुने छैनन् । यो संसारमा अलिकति सुख छ, अनि हाम्रो पासमा उनलाई आउनु छ ।" (यूनुस-६९,७०)

﴿نُمَتِّعُهُمْ قَلِيْلًا ثُمَّ نَضْطَرُّهُمْ اِلٰى عَذَابٍ غَلِيْظٍ﴾

"हामी उनीहरूलाई अल्पलाभ यहाँ पुऱ्याउनेछौं अनि कठोर यातनातिर विवश गरिदिनेछौं ।" (सूरः लुकमान-२४)

[2] यो संसारको साधन ऐश्वर्य तथा सुविधाहरू प्रत्यक्ष रूपले चाहे जति धेरै किन नहुन्, वास्तवमा अलिकति सामग्री हो किनभने अन्तमा उनीहरूलाई नाश हुनुछ र उनको विनाशभन्दा पूर्व उनीहरू स्वयं पनि नाश भइहाल्नेछन्, जो उनलाई प्राप्त गर्नुको कारण अल्लाह तआ़लालाई पनि बिर्सनेछ र हरप्रकारका सामाजिक बन्धनहरु र अल्लाहका सीमाहरुका उल्लंघन गर्दछन् ।

لَٰكِنِ الَّذِينَ اتَّقَوْا رَبَّهُمْ لَهُمْ جَنَّٰتٌ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَٰرُ خَٰلِدِينَ فِيهَا نُزُلًا مِّنْ عِندِ اللَّهِ ۗ وَمَا عِندَ اللَّهِ خَيْرٌ لِّلْأَبْرَارِ ﴿١٩٨﴾

(१९८) तर जुन मानिसहरू अल्लाहसित तर्सिरहे, उनको लागि स्वर्ग छ, जसमा नहरहरू बगिराखेका छन्, त्यसमा उनीहरू सधैं रहनेछन् । यिनी अल्लाहका तर्फबाट अतिथि हुन् । र पुण्य कार्य गर्नेहरूको लागि अल्लाह (तआला) को पासमा जे-जति पनि छ, त्यो सर्वश्रेष्ठ एवं उत्तम छ ।[1]

وَإِنَّ مِنْ أَهْلِ الْكِتَٰبِ لَمَن يُؤْمِنُ بِاللَّهِ وَمَا أُنزِلَ إِلَيْكُمْ وَمَا أُنزِلَ إِلَيْهِمْ خَٰشِعِينَ لِلَّهِ لَا يَشْتَرُونَ بِـَٔايَٰتِ اللَّهِ ثَمَنًا قَلِيلًا ۗ أُولَٰٓئِكَ لَهُمْ أَجْرُهُمْ عِندَ رَبِّهِمْ ۗ إِنَّ اللَّهَ سَرِيعُ الْحِسَابِ ﴿١٩٩﴾

(१९९) र अवश्य अहले किताब मध्येबाट पनि केही मानिसहरू यस्ता छन्, जो अल्लाह (तआला) मा विश्वास गर्दछन् र तिमीतिर जे उतारिए र जे उनीतिर उतारियो, त्यसमाथि पनि । अल्लाह तआलासित भय गर्दछन्, र अल्लाह (तआला) का आयतहरुलाई स-साना मूल्यहरुमा बेच्दैनन् ।[2] उनीहरूको प्रतिफल उनको प्रभुसित छ ।

---

[1]तिनका विपरीत जो परहेजगारी तथा अल्लाहको भयले जीवन व्यतीत गरी अल्लाहको सदनमा उपस्थित हुनेछन् यद्यपि उनको पासमा अल्लाहलाई बिर्सिहाल्नेहरूको जस्तै धनको अधिकता तथा जीवन सामग्री त्यसप्रकार उपलब्ध हुनेछैन, तर उनी अल्लाहका अतिथि हुनेछन् जो सम्पूर्ण सृष्टिको स्रष्टा तथा स्वामी हो । र त्यहाँ उनलाई जुन प्रतिफल प्राप्त हुनेछ, त्यो त्यसभन्दा अत्याधिक हुनेछ जुन संसारमा काफ़िरहरूलाई सामयिक रूपले प्राप्त भएको थियो ।

[2]यस आयतमा अहले किताबका त्यस गिरोहको वर्णन छ, जसलाई रसूल करीम सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा विश्वास गर्न सौभाग्य प्राप्त भयो । तिनका ईमान र ईमानका गुणहरुको वर्णन गरी अल्लाह तआलाले अन्य अहले किताबभन्दा उनीहरूलाई श्रेष्ठ बनाइदियो । जसको योज़ना नै इस्लाम तथा इस्लामका दूत तथा मुसलमानहरूको विरोध गर्नु थियो । अल्लाहका आयतहरुलाई परिवर्तन गर्नु तथा लुकाउनु र संसारको आंशिक लाभको कारण ज्ञानलाई लुकाउनु थियो । अल्लाह तआलाले आदेश गर्‍यो हे ईमानवालाहरू ! अहले किताब यस्ता छैनन्, बरु यिनी अल्लाहसित तर्सनेवाला हुन् र अल्लाहका आयतहरुलाई सानोतिनो मूल्यमा बेच्नेवाला छैनन् । यसको अर्थ यो भयो कि जो विद्वान र ज्ञानी सांसारिक आकांक्षाको कारण अल्लाहका आयतहरुलाई परिवर्तित गर्दछन् अथवा तिनका भावार्थको वर्णन गर्नमा भूठो बोल्दछन् अथवा लुकाउँदछन्, उनी अल्लाहको ईमान र भयबाट बञ्चित छन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ ٱصْبِرُوا۟ وَصَابِرُوا۟ وَرَابِطُوا۟ وَٱتَّقُوا۟ ٱللَّهَ لَعَلَّكُمْ تُفْلِحُونَ ۝٢٠٠

निःसन्देह अल्लाह (तआला) शीघ्र नै हिसाब लिने छ ।

(२००) हे निष्ठावानहरू ! तिमी धैर्य राख ।[1] र एक-अर्कालाई समातिराख र धर्मयुद्धको लागि तयार रह ताकि तिमी लक्ष्यमा पुग्नसक ।

## سُورَةُ النِّسَاءِ

## सूरतुन निसा-४

सुरः निसा मदीनामा उत्रेको र यसमा एक सय छहत्तर आयत तथा चौबीस रूकूअ छन् ।

---

हाफ़िज इब्ने कसीरले लेख्नुभएको छ कि यस आयतमा जुन ईमानवालाहरूको वर्णन छ तिनको संख्या यहूदीहरूमा दससम्म पुग्दछ तर इसाई धेरै संख्यामा मुसलमान भए र उनीहरूले सत्य-धर्मलाई अपनाए । (तफ़सीर इब्ने कसीर)

[1]धैर्य राख अर्थात् आज्ञाकारीहरूको बाटो अपनाउ र मोहं तथा स्वाद छोड्न आफ्ना इन्द्रियहरूमाथि नियन्त्रण राख र यसलाई दृढताले स्थाई राख । مصابرة (صابرو) युद्धको तीव्रतामा शत्रुको अगाडी डटिरहनु, यो धैर्यको अत्याधिक कठिन सीमा हो । यसैले यसलाई अलगसित वर्णित गरिएको छ । (رابطوا) युद्धको मैदान अथवा युद्धको मोर्चामा हर समय जागृत रह र धर्मयुद्धको लागि तयार रहनु मुराबत: हो । यो पनि ठूलो साहस र निष्ठाको कार्य हो । यसैले हदीसमा यसको यो विशेषता वर्णित गरिएको छ ।

(رِباط يوم في سبيل الله خيرٌ مِنَ الدنيا وَمَا عَلَيْهَا)

(सहीह बुखारी बाब फ़जले रबाते यौमिन फ़ी सबीलिल्लाह)

"अल्लाहको मार्ग (धर्मयुद्धमा) एक दिन खेमा स्थापित गर्नु (मोर्चा बन्द हुनु) संसार र त्यसको सुखभन्दा श्रेष्ठ छ ।"

यसको अतिरिक्त हदीसमा छ । मकारिह (अर्थात् अप्रियताको स्थिति) मा पूर्ण वुजू गर्नु, मस्जिदमा धेरै टाढाबाट हिंडेर जानु र नमाज पश्चात दोस्रो नमाज़को प्रतिक्षालाई पनि (رِباط) (रेबात) भनिएको छ । (सहीह मुस्लिम किताबुल तहारः)

**सूरतुन-निसा**

निसाको अर्थ "स्त्रीहरू" हो । यस सूरःमा स्त्रीहरूको धेरैजसो समस्याहरूको वर्णन छ, यसकारण सूरः निसा भनिन्छ ।

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाह तआलाको नामबाट प्रारम्भ गर्दछु, जो अति कृपालु तथा अति दयालु छ।

يَاَيُّهَا النَّاسُ اتَّقُوْا رَبَّكُمُ الَّذِىْ خَلَقَكُمْ مِّنْ نَّفْسٍ وَّاحِدَةٍ وَّخَلَقَ مِنْهَا زَوْجَهَا وَبَثَّ مِنْهُمَا رِجَالًا كَثِيْرًا وَّنِسَآءً ۚ وَاتَّقُوا اللّٰهَ الَّذِىْ تَسَآءَلُوْنَ بِهٖ وَالْاَرْحَامَ ۗ اِنَّ اللّٰهَ كَانَ عَلَيْكُمْ رَقِيْبًا ①

(१) हे मानिसहरू ! आफ्नो त्यस पालनकर्तासित तर्स जसले तिमीलाई एक जीवबाट तथा यसैबाट त्यसको पत्नीलाई रच्यो[1] र दुवैबाट धेरै नर-नारी फैलाइदियो र त्यस अल्लाहसित तर्स जसको नाममा परस्पर माँगदछौ तथा सम्बन्ध विच्छेद[2] बाट वस्तुतः अल्लाह तिमीमाथि संरक्षक छ।

وَاٰتُوا الْيَتٰمٰٓى اَمْوَالَهُمْ وَلَا تَتَبَدَّلُوا الْخَبِيْثَ بِالطَّيِّبِ ۖ وَلَا تَأْكُلُوْٓا

(२) तथा अनाथहरूलाई तिनको धन दिइहाल एवं पवित्रको साटो अपवित्र ग्रहण नगर तथा आफ्नो धनमा

[1] "एक जीव" सित तात्पर्य मानव जातिको परमपिता आदरणीय आदम अलैहिस्सलाम हुन्। र ﴿وَخَلَقَ مِنْهَا زَوْجَهَا﴾ मा (منها) सित त्यही जीव अर्थात् आदम र उनीबाट उनकी पत्नी आदरणीय हउवालाई सृष्टि गरे। आदरणीय हौवा आदरणीय आदमबाट कसरी पैदा भइन्, यसमा मतभेद छ। आदरणीय इब्ने अब्बासको कथनानुसार आदरणीय हौवा पुरुष (अर्थात् आदम) बाट जन्म लिइन् अर्थात् उनको बायाँ करङबाट। एक हदीसमा पनि भनिएको छ।

(إِنَّ الْمَرْأَةَ خُلِقَتْ مِنْ ضِلَعٍ وَإِنَّ أَعْوَجَ شَيْءٍ فِي الضِّلَعِ أَعْلَاهُ)

"स्त्री करङबाट पैदा गरिएको हो र करङमा सबभन्दा बाङ्गो भाग माथिल्लो छ। यदि तिमी त्यसलाई सीधा गर्न चाहन्छौ भने भाँचिहाल्छौ र यदि तिमी त्यसबाट लाभ लिन चाहन्छौ भने बाङ्गोबाट नै लाभ लिन सक्छौ।"

(सहीह बुख़ारी, किताब बदऊल ख़ल्क, सहीह मुस्लिम, किताबुल रिजाऊ)

केही आलिमहरूले यस हदीसबाट अर्थ निकाल्दै आदरणीय इब्ने अब्बाससित सम्बन्धित विचारको समर्थन गर्नुभएको छ। कुर्आन करीम को शब्द (خلق منها) बाट यसै विचारको समर्थन हुन्छ। आदरणीय हौवाको जन्म यसै एक जीवबाट भयो जसलाई आदम भनिन्छ।

[2] (والأرحام) को अर्थ हो सम्बन्धहरुको विच्छेदबाट बच। (رحم-أرحام) को बहुवचन हो। तात्पर्य सम्बन्ध हो, जुन मातृ गर्भाशयको आधारमा बन्दछन्। यसबाट विवाह योग्य तथा विवाहका अयोग्य (निकट सम्बन्धि) दुबै सम्बन्ध तात्पर्य छ। सम्बन्धहरुलाई हर अवस्थामा तोड्नु महापाप हो। हदीसमा निकट सम्बन्धिहरूलाई हर अवस्थामा सम्बन्ध स्थापित गर्नु तथा तिनका अधिकारीहरूलाई प्रदान गर्नुमा विशेष जोड दिइएको छ। जसलाई सम्बन्ध तोड्नु भनिन्छ।

أَمْوَالَهُمْ إِلَىٰٓ أَمْوَالِكُمْ ۚ إِنَّهُۥ كَانَ حُوبًا كَبِيرًا ②

मिसाएर तिनको धन नखाउ, वस्तुतः यो घोर पाप हो ।[1]

وَإِنْ خِفْتُمْ أَلَّا تُقْسِطُوا۟ فِى ٱلْيَتَٰمَىٰ فَٱنكِحُوا۟ مَا طَابَ لَكُم مِّنَ ٱلنِّسَآءِ مَثْنَىٰ وَثُلَٰثَ وَرُبَٰعَ ۖ فَإِنْ خِفْتُمْ أَلَّا تَعْدِلُوا۟ فَوَٰحِدَةً أَوْ مَا مَلَكَتْ أَيْمَٰنُكُمْ ۚ ذَٰلِكَ أَدْنَىٰٓ أَلَّا تَعُولُوا۟ ③

(३) यदि तिमीलाई भय छ कि अनाथ केटीहरूसँग विवाह गरेर तिमीले न्याय गर्न सक्ने छैनौ भने अरू स्त्रीहरूमध्ये जुन तिमीलाई मन पर्छन् तिमी उनीसित विवाह गरिहाल, दुईवटी, तीनवटी वा चारवटी सँग विवाह गर परन्तु यदि समानता गर्न नसक्ने भय छ भने एउटै नै पर्याप्त छ अथवा तिम्रो अधीनमा रहेको दासीहरु (लौंडीमा), मा टुङ्गो लगाउ । यो अधिक निकट छ कि

[1]यी अनाथ जब युवा तथा वयस्क भइहालन् त उनको धन उनीलाई फिर्ता गरिदेउ । अपवित्रबाट नराम्रा तथा पवित्रबाट राम्रा कुराहरूको अर्थ हो । अर्थात् यस्तो नगर कि तिनको मालबाट राम्रा, कुरा लिइहाल । र मात्र गणना पूरा गर्नको निम्ति नराम्रा कुराहरू यिनको साटो राखिदेउ । यी नराम्रा कुराहरूलाई अपवित्र र राम्रा कुराहरूलाई पवित्र भनेर यस कुरोतिर संकेत गरिएको छ कि यसप्रकार साटिएको माल वास्तवमा पवित्र र उचित छ परन्तु मात्र तिम्रो बेईमानीपनाको कारण अपवित्र भइहाल्यो र अब पवित्र रहेन, तिम्रो लागि अपवित्र र वर्जित भइहाल्यो । यसप्रकार बेईमानीपनाले उनको मालमा आफ्नो माल मिसाएर खानु पनि मनाही छ, तर यदि उद्देश्य भलाई छ भने तिनको माललाई आफ्नो मालमा मिसाउनु उचित छ ।

[2]यसको व्याख्याको लागि आदरणीय आयशा (रज़ी अल्लाह अन्हा) को कथन छ कि धनवान एवं सुन्दर अनाथ बालिका यदि कुनै संरक्षकको संरक्षणमा हुन्छ र त्यो त्यसको धन र सुन्दरताको कारण विवाह गरिहाल्छ तर त्यसका अन्य पत्नीहरूको अपेक्षा त्यसलाई पूर्ण महरको अधिकार दिंदैन । अल्लाह तआलाले यस अत्याचारबाट रोकेको छ कि यदि तिमी अनाथ बालिकाहरूसित न्याय गर्न सक्दैनौ भने तिमी तिनीसित विवाह नै नगर, तिम्रो लागि अन्य स्त्रीहरूसित विवाह गर्ने बाटो खुला छ । (सहीह बुखारी किताबुत तफ़सीर) वरु एकको अतिरिक्त दुईसित, तीनसित यहाँसम्मकि चार स्त्रीहरूसितसम्म तिमी विवाह गर्न सक्दछौ, परन्तु यस अनुबन्धका साथ कि तिनीहरूको बीचमा न्याय गर्न सक्नेछौ । अथवा एउटैसित विवाह गर अथवा त्यसको अतिरिक्त दासीमाथि नै निर्वाह गर । यस आयतबाट ज्ञात भयो कि एक पुरुष (यदि त्यसलाई आवश्यकता छ) भने एकै समयमा चार स्त्रीहरूसँग विवाह गर्न सक्दछ तर त्यसभन्दा बढी होइन, जस्तो कि सहीह हदीसमा यसलाई अरु बढी विस्तार तथा स्पष्ट गरिदिएको छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले जो चारभन्दा अधिक विवाह गर्नुभयो, त्यो

(यस्तो गर्नाले अन्याय तथा) एकातिर झुक्नुबाट बच ।[1]

(४) र स्त्रीहरूलाई उनको महर (जुन राशि विवाहको लागि मान्य होस्) खुशीपूर्वक दिइहाल र यदि उनी स्वयं आफ्नो इच्छाले केही महर छाडिदिन्छन् भने, त्यसलाई आफ्नो इच्छा अनुसार खाउ पिउ ।

وَاٰتُوا النِّسَآءَ صَدُقٰتِهِنَّ نِحْلَةً ؕ فَاِنْ طِبْنَ لَكُمْ عَنْ شَیْءٍ مِّنْهُ نَفْسًا فَكُلُوْهُ هَنِیْٓـًٔا مَّرِیْٓـًٔا ۝

(५) बुद्धिहीनहरूलाई आफ्नो धन जसलाई अल्लाहले तिम्रो सहारा बनाएको छ, नदेउ र त्यसमध्येबाट उनीहरूलाई खुवाउ र वस्त्र देउ तथा उनीसित कोमल वचन बोल ।

وَلَا تُؤْتُوا السُّفَهَآءَ اَمْوَالَكُمُ الَّتِیْ جَعَلَ اللّٰهُ لَكُمْ قِیٰمًا وَّارْزُقُوْهُمْ فِیْهَا وَاكْسُوْهُمْ وَقُوْلُوْا لَهُمْ قَوْلًا مَّعْرُوْفًا ۝

(६) र अनाथहरूलाई उनीहरू वयस्क हुने बेलासम्म सुधारदै र परीक्षण गर्दैरह, अनि यदि तिमी उनीहरूमा सुधार देख्छौ भने उनको माल सुम्पिदेउ, र उनीहरू ठूलो हुने कुराको भयले उनको माललाई शीघ्र-अतिशीघ्र व्यर्थ नखाउ,

وَابْتَلُوا الْیَتٰمٰی حَتّٰۤی اِذَا بَلَغُوا النِّكَاحَ ۚ فَاِنْ اٰنَسْتُمْ مِّنْهُمْ رُشْدًا فَادْفَعُوْۤا اِلَیْهِمْ اَمْوَالَهُمْ ۚ وَلَا تَاْكُلُوْهَاۤ اِسْرَافًا وَّبِدَارًا اَنْ یَّكْبَرُوْا ؕ وَمَنْ كَانَ غَنِیًّا فَلْیَسْتَعْفِفْ ۚ

उहाँका विशेषताहरूमध्ये हो, जसमा कुनै उम्मतिलाई अनुकरण गर्नु उचित छैन । (इब्ने कसीर)

अर्थात् एउटै स्त्रीसँग विवाह गर्नुमा भलाई छ किनभने एकभन्दा बढी पत्नीहरू राख्नुको अवस्थामा सबैसँग न्याय गर्न कठिन छ । जसतिर हार्दिक प्रेम अधिक हुनेछ, उसैतिर जीवन-सामग्री उपलब्ध गर्नुमा बढी ध्यान हुनेछ, यसप्रकार पत्नीहरूको बीचमा न्याय गर्नुमा असक्षम अल्लाहकहाँ अपराधी हुनेछ । कुर्आनले यस वास्तविकतालाई अर्को स्थानमा अति स्पष्टरूपले यसप्रकार वर्णन गरेको छ ।

﴿وَلَنْ تَسْتَطِیْعُوْۤا اَنْ تَعْدِلُوْا بَیْنَ النِّسَآءِ وَلَوْ حَرَصْتُمْ فَلَا تَمِیْلُوْا كُلَّ الْمَیْلِ فَتَذَرُوْهَا كَالْمُعَلَّقَةِ ؕ﴾

"र तिमी कदापि यस कुराको शक्ति राख्ने छैनौं कि पत्नीहरूमा न्याय गर्न सक, यद्यपि तिमी इच्छा राख्दछौ (त यो अवश्य गर) कि एकातिर नझुक र अन्य पत्नीहरूलाई व्यवस्था गरिदेउ ।" (सूरः निसा-१२९)

यसबाट यो ज्ञात भयो कि एकभन्दा अधिक विवाह गरी पत्नीहरूसँग न्याय नगर्नु गलत हो र अत्यन्त भयानक पनि ।

وَمَنْ كَانَ فَقِيْرًا فَلْيَاْكُلْ بِالْمَعْرُوْفِ ۚ فَاِذَا دَفَعْتُمْ اِلَيْهِمْ اَمْوَالَهُمْ فَاَشْهِدُوْا عَلَيْهِمْ ۚ وَكَفٰى بِاللّٰهِ حَسِيْبًا ⑥

र जो धनवान छन् उनीहरु त (त्यस मालवाट) बच्नुपर्छ । र हो, जो निर्धन छ त्यसले उचित रीतिले केही खान सक्छ । अनि जव उनीहरूलाई उनको माल सुम्पिन्छौ त साक्षी वनाउ, तथा लेखा जोखाको लागि अल्लाह पर्याप्त छ ।[1]

لِلرِّجَالِ نَصِيْبٌ مِّمَّا تَرَكَ الْوَالِدٰنِ وَالْاَقْرَبُوْنَ ۠ وَلِلنِّسَآءِ نَصِيْبٌ مِّمَّا تَرَكَ الْوَالِدٰنِ وَالْاَقْرَبُوْنَ مِمَّا قَلَّ مِنْهُ اَوْ كَثُرَ ۚ نَصِيْبًا مَّفْرُوْضًا ⑦

(७) माता-पिता तथा नजिकका सम्वन्धिहरूको सम्पत्तिमा पुरुषहरूको भाग छ र स्त्रीहरूको पनि (जुन धन-सम्पत्ति माता-पिता र नजिकका नातेदारहरू छाडेर मर्दछन्) चाहे त्यो धन कम होस् अथवा अधिक (त्यसमा) भाग निर्धारित गरिएको छ ।[2]

[1]अनाथहरूको मालको विषयमा आवश्यक निर्देश पश्चात यो आदेशवाट यो तात्पर्य छ कि जव अनाथको माल तिम्रो पासमा रहयो, तिमीले उसको कुनप्रकार रक्षा गर्‍यौ र जव उनको माल उनलाई सुम्पिदियौ, त त्यसमा कुनै प्रकार कमी तथा अधिकता अथवा कुनै प्रकारको परिवर्तन त गरेनौं । सामान्य मानिसहरूलाई तिम्रो ईमान्दारी अथवा वेइमानीको शायद थाहा नलागोस् तर अल्लाह तआलासित कुनै कुरा लुकेको छैन । त्यो नि:सन्देह जव तिमी त्यसको दरवारमा जानेछौ तव तिमीसित हिसाव लिइहाल्नेछ । यसैले हदीसमा आउँछ कि यो ठूलो जिम्मेवारीको काम हो । नवी सल्लल्लाहु अलैहि वसल्लमले अवूज़रसित भन्नुभयो, अवूज़र ? म तिमीलाई क्षीण देखिराखेको छु र तिम्रो लागि त्यो कुरा रुचाउँछु जुन आफ्नो लागि मन पराउँछु। तिमी दुई मानिसहरूमाथि पनि अमीर (नायक) नवन्नु र कुनै अनाथको मालको संरक्षक नवन्नु । (सहीह मुस्लिम, किताबुल इमार:)

[2]इस्लामभन्दा पूर्व यो पनि अत्याचार थियो कि स्त्रीहरू र स-साना बच्चाहरूको उत्तराधिकार को रूपमा कुनै पनि भाग दिइन्नथ्यो, केवल ठूलो पुत्रलाई जो लड्न योग्य हुन्थे, तिनै सम्पूर्ण सम्पत्तिका उत्तराधिकारी मानिन्थे । यस आयतमा अल्लाह तआलाको आदेश भयो कि पुरुषहरूकै सरह स्त्रीहरु, र केटाकेटीहरूलाई पनि आफ्ना माता-पिता र सम्वन्धिहरूका उत्तराधिकारी हुनेछन् । उनीहरूलाई वञ्चित गरिने छैन । परन्तु यो अर्के कुरा हो कि केटीहरूको भाग केटाहरूको भागको आधा छ (जस्तो कि तीन आयतपछि वर्णन छ) यो स्त्रीहरूमाथि अत्याचार होइन, न उसको अपमान हो, वरु इस्लामको यो उत्तराधिकारको नियम न्यायपूर्ण तथा तर्कसंगत छ किनभने इस्लामले स्त्रीलाई जीविका उपार्जनको कर्तव्यबाट अलग राखेको छ र पुरुषहरूलाई उसको संरक्षक वनाएको छ। यसको अतिरिक्त स्त्रीको पासमा महर (स्त्री धन) को रूपमा धन आउँछ, जसलाई एउटा पुरुष नै तिर्छ। यसप्रकार पुरुषमाथि स्त्रीको अपेक्षा कैयन् आर्थिक प्रभार आउँछन्, यसकारण यदि स्त्रीको भाग आधाको सट्टा

وَإِذَا حَضَرَ الْقِسْمَةَ أُولُوا الْقُرْبَىٰ وَالْيَتَامَىٰ وَالْمَسَاكِينُ فَارْزُقُوهُمْ مِنْهُ وَقُولُوا لَهُمْ قَوْلًا مَعْرُوفًا ⑧

(८) र जब बाँडने बेलामा सम्बन्धित तथा अनाथ एवं निर्धन आउँछन् भने तिमी त्यसबाट अलि-अलि उनीहरूलाई पनि देउ र उनीसित कोमलताले बोल ।[1]

وَلْيَخْشَ الَّذِينَ لَوْ تَرَكُوا مِنْ خَلْفِهِمْ ذُرِّيَّةً ضِعَافًا خَافُوا عَلَيْهِمْ فَلْيَتَّقُوا اللَّهَ وَلْيَقُولُوا قَوْلًا سَدِيدًا ⑨

(९) र मानिसहरू यस कुराबाट तर्सनुपर्छ कि यदि उनीहरू आफ्ना पछाडी निर्बल बच्चाहरू छाडेर जान्थे भने उनीहरूलाई ती बाल-बालिकाहरूका बिषयमा कति चिन्ता हुन्थ्यो अत: उनीहरू अल्लाहसित तर्सनुपर्छ र उचित कुरा भन्नुपर्छ ।[2]

---

पुरुषको बराबर भएको भए, त यो पुरुषमाथि अत्याचार हुन्थ्यो । तर अल्लाह (तआ़ला) ले कसैमाथि अत्याचार गरेको छैन । किनभने त्यो न्याय गर्नेवाला हो र बुद्धिमत्तापूर्ण पनि छ ।

[1]यसलाई केही विद्वानहरूले उत्तराधिकारको आयतबाट निरस्त भनेका छन्, परन्तु उचित कुरो यो हो कि यो निरस्त आदेश होइन । बरु एउटा विशेष नैतिक निर्देश हो कि सहायता योग्य सम्बन्धी जसको उत्तराधिकारमा कुनै भाग नहोस्, उनीहरूलाई पनि बाँड-फाँडको समय केही दिइहाल । यसको अतिरिक्त उनीसित प्रेमपूर्वक कोमल कुरा गर । धनलाई आइराखेको देखेर कारून र फ़िरऔन नबन ।

[2]केही व्याख्याकारहरूका निकट यसको संकेत ती मानिसहरूतिर गरिदै छ, जसको लागि वसीयत गरिएको छ । उनीहरूलाई शिक्षा दिइँदैछ कि उनका संरक्षण अधीन जो अनाथ छन्, उनीहरूसँग यस्ता व्यवहार गरुन् जस्तो उनी आफू मरेपश्चात आफ्ना बच्चाहरुसँग रुचाउँछन्, केहीका निकट यसबाट साधारण मानिसहरूलाई सम्बोधित गरेर भनिएको छ कि उनी अनाथ र अन्य स-साना बच्चाहरूसँग राम्रो व्यवहार गरुन् । यो कुराको मतलब नराखून् कि उनी उनको संरक्षणमा छन् अथवा छैनन् । केहीका निकट उनलाई सम्बोधित गरिएको छ, जो मृत्युको निकट व्यक्तिको पासमा बसेको हुन्छन्, उनको कर्तव्य छ कि उनी मर्नेलाई सम्झाऊन् ताकि उनी अल्लाहको अधिकार र मानिसहरूको अधिकारमा अल्छिपना नगरून् र वसीयतमा उनी यी दुबै कुरालाई ध्यानमा राखून् । यदि त्यो धनवान छ, त एक तिहाईको वसीयत यस्ता मानिसहरूको लागि गरोस्, जो उसको निकट सम्बन्धिहरूमा निर्धन र सहायताको पात्र होऊन अथवा कुनै धार्मिक काम अथवा संस्थामाथि व्यय गर्न वसीअत गरोस्, ताकि यो म़ाल उसको परलोकको राम्रो साथी बन्न सकोस् । र यदि त्यो धनवान छैन भने उसलाई एक-तिहाई मालमा वसीयत गर्नबाट रोकियोस् ताकि त्यसका घरवाला त्यस पश्चात कठिन निर्धनतामा नपरून् । यसैप्रकार कोही आफ्ना उत्तराधिकारीहरूबाट कसैलाई बञ्चित गर्न चाहन्छ भने

إِنَّ الَّذِينَ يَأْكُلُونَ أَمْوَالَ الْيَتَامَىٰ ظُلْمًا إِنَّمَا يَأْكُلُونَ فِي بُطُونِهِمْ نَارًا ۖ وَسَيَصْلَوْنَ سَعِيرًا ﴿١٠﴾

(१०) जुन मानिसहरू अनर्थ अत्याचार बाट अनाथहरूका माल खाने गर्छन्, उनीहरू आफ्ना पेटमा आगो नै भरिराखेका हुन्छन् र उनीहरू नरकमा जानेछन् ।

يُوصِيكُمُ اللَّهُ فِي أَوْلَادِكُمْ ۖ لِلذَّكَرِ مِثْلُ حَظِّ الْأُنثَيَيْنِ ۚ فَإِن كُنَّ نِسَاءً فَوْقَ اثْنَتَيْنِ فَلَهُنَّ ثُلُثَا مَا تَرَكَ ۖ وَإِن كَانَتْ وَاحِدَةً فَلَهَا النِّصْفُ ۚ وَلِأَبَوَيْهِ لِكُلِّ وَاحِدٍ مِّنْهُمَا السُّدُسُ مِمَّا تَرَكَ

(११) अल्लाह तआला तिमीलाई तिम्रो सन्तानको विषयमा आदेश दिन्छ कि एक पुत्रको भाग दुई पुत्रीहरूको समान छ।[1] यदि केवल पुत्रीहरू छन् र दुई भन्दा अधिक छन्, त उनीहरूले उत्तराधिकारको मालमध्येबाट दुई-तिहाई पाउनेछन्।[2] र यदि एउटै केटी छ त त्यसको लागि आधा छ र मृतकको माता-पितामा प्रत्येकलाइ

त्यसलाई रोकियोस् र यो ध्यान राखियोस् कि यदि तिनका पश्चात तिनका छोराहरू भोक तथा निर्धनतामा पुग्छन् भने, त्यसबेला उसमाथि के गुज्रने छ। यस व्याख्याको परिधिमा सबै ती सम्बन्धित मानिसहरू आइहाले जसको वर्णन माथि भइसकेको छ। (तफ़सीर कुर्तुबी तथा फ़तहुल क़दीर)

[1]यसको गुण तथा तर्कसँगत हुने कुराको वर्णन हामी पहिले नै गरिसकेका छौं, उत्तराधिकारी बालक, बालिका दुबै छन् भने विधिवत विभाजन हुनेछ। बालक, बालिका साना होउन अथवा ठूला सबै उत्तराधिकारी हुनेछन्। यहाँसम्मकि भ्रुण पनि उत्तराधिकारी हुनेछ। हो, काफ़िर सन्तान उत्तराधिकारी हुने छैनन्।

[2]अर्थात् पुत्र छैन भने धनको दुई-तिहाई दुईभन्दा अधिक पुत्रीहरूलाई दिइनेछ र यदि दुईटा नै पुत्रीहरू छन् तैपनि उनीहरुलाई दुई-तिहाई भाग दिइनेछ जस्तो कि हदीसमा आउँछ कि साद बिन रबीअ "ओहद"मा शहीद भइहाले। उनका दुई पुत्रीहरू थिए, तर सादको पुरै धनमाथि उनको एक भाइले अधिकार गरिहाले, तब नबी सल्लल्लाहु अलैहि वसल्लमले उनका काकाबाट दुई-तिहाई उनलाई दिलाउनु भयो, (तिर्मिजी, अबू दाऊद, इब्ने माजा, किताबुल फ़राईज) यसबाहेक सूरः निसा अन्तमा भनिएको छ कि यदि मृत्युका उत्तराधिकारी दुई बहिनीहरू छन् भने दुई-तिहाई धनको उत्तराधिकारी हुनेछन् त फेरि दुई पुत्रीहरू दुई-तिहाई धनको अधिक उत्तराधिकारी हुनेछन्। जुनप्रकार दुई बहिनीहरूभन्दा अधिक भएको दशामा उनीहरूलाई दुईभन्दा अधिक पुत्रीहरूको नियमाधीन राखिएको छ, (फ़तहुल क़दीर) सारांश यो भयो कि दुई वा दुईभन्दा अधिक छोरीहरू छन् भने छोडिएर गएको धनबाट दुई-तिहाई पुत्रीहरूको भाग हुनेछ, शेष धन असबा (त्यो उत्तराधिकारी जसको भाग निर्धारित छैन) मा विभाजित हुनेछ।

إِن كَانَ لَهُ وَلَدٌ فَإِن لَّمْ يَكُن لَّهُ وَلَدٌ وَوَرِثَهُ أَبَوَاهُ فَلِأُمِّهِ الثُّلُثُ فَإِن كَانَ لَهُ إِخْوَةٌ فَلِأُمِّهِ السُّدُسُ مِن بَعْدِ وَصِيَّةٍ يُوصِي بِهَا أَوْ دَيْنٍ ۗ آبَاؤُكُمْ وَأَبْنَاؤُكُمْ لَا تَدْرُونَ أَيُّهُمْ أَقْرَبُ لَكُمْ نَفْعًا ۚ فَرِيضَةً مِّنَ اللَّهِ ۗ إِنَّ اللَّهَ كَانَ عَلِيمًا حَكِيمًا ⑪

त्यसबाट छाडिएको मालको छैठौं भाग छ, यदि त्यस (मृतक) का सन्तान छन् ।[1] यदि सन्तान छैनन र माता-पिता उत्तराधिकारी छन्, त त्यसकी आमाको लागि तेस्रो भाग छ[2] । यदि मृतकका धेरै भाई छन् भने त्यसकी आमाको छैठौं भाग छ ।[3] यो भाग त्यस वसीयत (को पूर्णता) को पश्चात छ, जुन मरेर जानेले गरेको छ अथवा ऋण भुक्तानीको पश्चात । तिम्रो पिता होऊन् अथवा तिम्रो पुत्र तिमीलाई थाहा छैन ।

[1]माता-पिताको भाग ३ अवस्थाहरू वर्णन गरिएका छन्, प्रथम यो कि मृतकका सन्तान छ भने आमा-बाउ प्रत्येकले मात्र छैठौं (१/६) भाग पाउनेछन्, शेष दुई-तिहाई धन सन्तानमा वितरण हुनेछ, हो, यदि मृतको सन्तानमा एक पुत्री छ भने त्यसबाट मात्र आधा धन (अर्थात् ६ भाग मध्येबाट तीन भाग) पुत्रीको हुनेछ र छैठौं भाग (१/६) आमालाई तथा (१/६) पितालाई दिए पश्चात (१/६) शेष रहनेछ र यो शेष (१/६) असबा भएर बाउको भागमा जानेछ अर्थात् त्यसलाई दुई (१/६) प्राप्त हुनेछ, एउटा पिताको रूपमा दोस्रो असबाको रूपमा ।

[2]यो दोस्रो अवस्था हो कि मृतकको सन्तान छैन (स्मरणीय छ कि पौत्र-पौत्री सन्तानमा सर्वसम्मतिले सम्मिलित छन्) यस दशामा आमाको लागि तेस्रो भाग (१/३) तथा शेष दुई भाग (२/२) पितालाई असबा स्वरूप प्राप्त हुनेछ, तथा यदि माता-पिताका साथ मृतककी पत्नी अथवा मृत स्त्रीको पति पनि जीवित छ भने त उत्तम कथनानुसार पति अथवा पत्नीको भाग (जसको विवरण अगाडी आइराखेको छ) निकालेर शेष धनबाट आमाको लागि एक तिहाई (१/३) एवं शेष (२/३) बाबुको हुनेछ ।

[3]तेस्रो अवस्था यो हो कि मृतका भाई-बहिनी जीवित छन् त ती भाई-बहिनी शाखै (ऐनी) अर्थात् एकै माता-पिताको सन्तान होउन् अथवा अल्लाती अर्थात् पिता एक माता विभिन्न होऊन् अथवा पिता विभिन्न माता एक होस् अर्थात् अख्याफी भाई-बहिनी होऊन् । यद्यपि यी भाई-बहिनी मृतको पिता छँदै उत्तराधिकारीको भागी हुनेछैन, किन्तु आमाको लागि "हजब" भाग कम गर्नुको कारण बनिहाल्ने छन् अर्थात् एकभन्दा अधिक हुनेछन् भने आमाको तिहाई भाग (१/३) को छैठौं भाग (१/६) मा परिवर्तित गरिनेछ, शेष पूरा धन (५/६) पिताको धनमा गइहाल्नेछ, तर अन्य कुनै उत्तराधिकारी नहुँदा तब, हाफिज़ इब्ने कसीर लेख्दछन् कि प्राय धर्म-विशेषज्ञहरूका समीप दुई भाइको त्यही नियम छ जुन दुईभन्दा अधिकको सम्बन्धमा वर्णित भएको छ । यसको अभिप्राय यो भयो कि यदि भाई-बहिनी छन् भने आमाको तिहाई भाग रहनेछ, त्यो (१/६) मा परिवर्तित हुनेछैन । (तफ़सीर इब्ने क़सीर)

कि उनीहरूमध्ये को तिमीलाई लाभ पुऱ्याउनमा अधिक निकट छ ।[1] यी भाग अल्लाह (तआ़ला) को तर्फबाट निर्धारित गरिएका हुन् । निःसन्देह अल्लाह तआ़ला ज्ञाता बुद्धिमान छ ।

وَلَكُمْ نِصْفُ مَا تَرَكَ أَزْوَاجُكُمْ إِن لَّمْ يَكُن لَّهُنَّ وَلَدٌ ۚ فَإِن كَانَ لَهُنَّ وَلَدٌ فَلَكُمُ الرُّبُعُ مِمَّا تَرَكْنَ ۚ مِن بَعْدِ وَصِيَّةٍ يُوصِينَ بِهَا أَوْ دَيْنٍ ۚ وَلَهُنَّ الرُّبُعُ مِمَّا تَرَكْتُمْ إِن لَّمْ يَكُن لَّكُمْ وَلَدٌ ۚ فَإِن كَانَ لَكُمْ وَلَدٌ فَلَهُنَّ الثُّمُنُ مِمَّا تَرَكْتُم ۚ مِّن بَعْدِ وَصِيَّةٍ تُوصُونَ بِهَا أَوْ دَيْنٍ ۗ وَإِن كَانَ رَجُلٌ يُورَثُ كَلَالَةً أَوِ امْرَأَةٌ وَلَهُ أَخٌ أَوْ أُخْتٌ فَلِكُلِّ وَاحِدٍ مِّنْهُمَا السُّدُسُ ۚ فَإِن كَانُوا أَكْثَرَ مِن

(१२) र तिम्रा पत्नीहरू जे-जति छाडेर मर्दछन् त्यसमध्ये आधा तिम्रो हो, यदि तिनका सन्तान छैनन् तर यदि तिनका सन्तान छन् भने जे तिनीहरूले छोडेका छन् त्यसमध्ये तिम्रो चौथाई हुनेछ ।[2] यस पश्चात कि जुन वसीयत (मन्जूरी) गरेका छन् पूरा गरिएको होस् अथवा जुन ऋण तिनीहरूमाथि छ त्यसको भुक्तानी भएको होस् र जे-जति तिमी छाड्छौ, तिनीहरूको चौथाई हुनेछ, तिम्रो कोही सन्तान नभएको अवस्थामा । परन्तु यदि तिम्रो सन्तान छ भने तिमीद्वारा छाडिएकामध्ये तिनीहरूको (पत्नीहरूको) आठौं भाग हुनेछ ।[3] यस पश्चात कि तिम्रो वसीयत पूरा गरिएको छ, र ऋण भुक्तानी गरिसकिएको छ, र यदि कुनै



[1]अतः तिमी आफ्नो प्रबोधानुसार उत्तराधिकारको विभाजन नगर बरु अल्लाहको आदेशानुसार जसको जति भाग निर्धारित छ, त्यो उनीहरूलाई देउ ।

[2]सन्तान नभएको अवस्थामा पुत्रको सन्तान अर्थात् पौत्र पनि सन्तानका समतुल्य छन्, यसमाथि मुसलमान समुदायको सहमति छ, (फ़तहुल क़दीर तथा इब्ने कसीर) यसैप्रकार मृत पतिको सन्तान चाहे त्यो त्यसको उत्तराधिकारी वर्तमान पत्नीबाट होस् अथवा कुनै अन्य पत्नीबाट, यसैप्रकार मृत पत्नीको सन्तान चाहे त्यसको पतिबाट होस् अथवा पूर्वको कुनै पतिबाट ।

[3]पत्नी यदि एक छ अथवा अनेक छन् चौथो वा आठौं भाग पाउनेछन् । यही भाग उनीमा विभाजित हुनेछ, प्रत्येकलाई चौथाई (१/४) अथवा आठौं (१/८) भाग प्राप्त हुनेछैन । यो सर्वसम्मति नियम हो ।

ذَٰلِكَ فَهُمْ شُرَكَآءُ فِى ٱلثُّلُثِ مِنۢ بَعْدِ وَصِيَّةٍ يُوصَىٰ بِهَآ أَوْ دَيْنٍ غَيْرَ مُضَآرٍّ ۚ وَصِيَّةً مِّنَ ٱللَّهِ ۗ وَٱللَّهُ عَلِيمٌ حَلِيمٌ ﴿١٢﴾

पुरुष अथवा स्त्रीको न त कुनै सन्तान छ न त उनका आमा-बाबूनै जीवित छन्,[1] र त्यसको एउटा भाई अथवा बहिनी छन्[2] भने ती दुबैमध्ये प्रत्येकलाई छैटौं भाग हुनेछ । तर यदि उनीहरू यस भन्दा अधिक छन् भने एक तिहाईमा सबै सम्मिलित हुनेछन् ।[3]

[1]कलाल: बाट तात्पर्य त्यो मृत छ जसको पिता छैन न पुत्र-पुत्री । यो इक्लील शब्दबाट बनेको हो जसको अर्थ यस्तो कुरो हो जुन शिरलाई त्यसको किनाराहरुले घेरिहालोस्, कलाल:लाई पनि कलाल: यसकारण भनिन्छ कि जसको मूल तथा शाखामा कोही उत्तराधिकारी नहोस् तथा छेउ एवं आसपासका उत्तराधिकारी बन्छन् । (फ़तहुल क़दीर तथा इब्ने क़सीर) यो पनि भनिन्छ कि कलाल:को मूल धातु कलाल: हो जसको अर्थ थाकिहाल्नु हो, तथा अग्रसर हुन सकेन ।

[2]यसबाट तात्पर्य माँ जाये भाई-बहिनी हुन् अर्थात् जसको आमा एक छ पिता अलग-अलग । किनभने साखै भाई-बहिनी अथवा अल्लाती (विभिन्न आमा तथा एक पिताबाट) भाई-बहिनीको भाग उत्तराधिकारमा यसप्रकार छैन तथा यसको वर्णन यसै सूर:मा अन्तमा आइराखेको छ, र यो प्रावधान पनि सर्वसम्मतिबाट छ (फ़तहुल कदीर) वास्तवमा वंशको लागि ( للذكر مثل حظ الانثيين ) को नियम लागू हुन्छ, यही कारण छ कि पुत्र-पुत्रीहरूका लागि यहाँ तथा भाई-बहिनीहरूका लागि यस सूर:को अन्तिम आयत प्रत्येक दुईमा यही नियम छ, परन्तु माताको सन्तानमा वंशज भाग हुँदैन । यसकारण त्यहाँ प्रत्येक भाई-बहिनीलाई समान भाग दिइन्छ । जुन स्थिति भएपनि एक भाईलाई अथवा एक बहिनीलाई प्रत्येकलाई छैठौं (१/६) भाग प्राप्त हुनेछ ।

[3]एकभन्दा अधिक भएमा यी सबै एक-तिहाई (१/३) भागमा साझेदार हुनेछन् । पुरुष-स्त्रीमा कुनै अन्तर गरिने छैन । बिना भेदभाव सबैलाई समान भाग हुनेछ पुरुष होस् वा स्त्री ।

**विचारणीय-** माँजाये अर्थात् अख्याफी भाई केही आदेशहरुमा अन्य उत्तराधिकारीहरूभन्दा विभिन्न छन् (१) यी मात्र आफ्नो आमाको कारण उत्तराधिकारी हुन्छन् (२) यिनका नर-नारीका भाग समान हुन्छ, (३) यिनी त्यसबेला उत्तराधिकारी हुनेछन् जब मृत कलाल: हुन्छ, अत: पिता, हजुरबुवा, पुत्र तथा पौत्र आदिको उपस्थितिमा उत्तराधिकरी हुने छैनन्, (४) तिनका नर-नारी जति अधिक भएपनि तिनको भाग एक-तिहाई (१/३) भन्दा अधिक हुनेछैन तथा जस्तो कि अघि भनिएको छ उनलाई आफ्नो मृत अख्याफ़ी भाईबाट जुन भाग प्राप्त हुन्छ, त्यसमा नर-नारीको भाग बराबर हुनेछ । यो हुँदैन कि नरलाई नारीको दुईगुना दिइयोस्, आदरणीय उमरले आफ्नो शासनकालमा यही निर्णय गर्नु भएको थियो र इमाम जुहरी भन्दछन् कि आदरणीय उमरले यो निर्णय यथावत त्यसैबेला गर्नुभयो होला जब उनीसित नबी सल्लल्लाहु अलैहि वसल्लमको कुनै हदीस (कथन) हुनेछ ।

यस पश्चात कि वसीयत पूरा भएको र ऋण चुक्ता भएको होस्[1] जबकि अरुलाई हानि न पुऱ्याइएको होस्।[2] यो अल्लाहको तर्फबाट ताकेदाका साथ आदेश छ र अल्लाह सबै कुराको ज्ञाता अत्यन्त सहनशील छ ।

تِلْكَ حُدُوْدُ اللّٰهِ ۭ وَمَنْ يُّطِعِ اللّٰهَ وَرَسُوْلَهٗ يُدْخِلْهُ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْھٰرُ خٰلِدِيْنَ فِيْھَا ۭ وَذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ⑬

(१३) यी सीमाहरू अल्लाह तआ़लाबाट निर्धारित गरिएका सीमा हुन् र जो अल्लाह (तआ़ला) तथा त्यसका रसूल (सल्लल्लाहु अलैहि वसल्लम) को आज्ञा-पालन गर्नेछ, त्यसलाई अल्लाह तआ़लाले स्वर्गमा लैजानेछ जसमा नहरहरू बगिराखेका छन्।

[1]उत्तराधिकार आदेशहरूको वर्णनको साथ यो तेस्रो पटक भनिंदैछ कि उत्तराधिकारको विभाजन वसीयत (उत्तरदान) पूरा गरिए तथा ऋण भुक्तानी गरे पश्चात गर्नुपर्दछ, जसबाट विदित हुन्छ कि यी दुबैलाई पूरा गर्नु कति आवश्यक छ, अनि यसमाथि पनि सहमति छ कि सर्वप्रथम ऋण चुक्ता गरिनेछ तथा वसीयत त्यसको पश्चात पूरा गरिनेछ किन्तु अल्लाह तआ़लाले तीनवटै स्थानहरूमा उत्तरदानको चर्चा ऋणभन्दा पहिले गरेको छ जबकि क्रमानुसार ऋणको चर्चा प्रथम हुनुपर्छ। यसमा गुण यो छ कि ऋणलाई त मानिसहरू महत्व दिन्छन्, दिंदैनन् भने पनि अझै जोड दिन्छन् र बलपूर्वक असुल गरिहाल्छन् तर उत्तरदानलाई आवश्यक ठानिंदैन र अधिकांश मानिसहरू यस विषयमा अल्छीपनाले काम लिन्छन् अतः उत्तरदानको चर्चा प्रथम गरेर त्यसको महत्वलाई वर्णन गरिदियो । (रूहुल मआनी)

**विचारणीय-** यदि पत्नीको स्त्री धन (महर) दिइएको छैन भने त्यो पनि ऋण हुनेछ र त्यसको पनि भुक्तानी उत्तराधिकारको वितरणभन्दा अगाडी अनिवार्य छ र स्त्रीको धार्मिक विधिको भाग त्यसबाहेक हुनेछ ।

[2]यसप्रकार कि वसीयतद्वारा कुनै उत्तराधिकारीलाई बञ्चित गरिहालियोस् अथवा कसैको भाग घटाइयोस् या यस्तै उत्तराधिकारलाई हानि पुऱ्याउनको निम्ति भनिदेओस् कि फलाना व्यक्तिबाट मैले यति ऋण लिएको जबकि केही पनि लिएको छैन । मानौं हानि पुऱ्याउनुको सम्बन्ध उत्तराधिकार तथा ऋण दुबैसित छ, तथा दुबैद्वारा हानि पुऱ्याउनु निषेध एवं महापाप हो र यस्तो वसीयत पनि झुठो हुनेछ ।

जसमा उनी सधैं निवास गर्नेछन् र त्यो निकै ठुलो सफलता हो ।

وَمَنْ يَّعْصِ اللّٰهَ وَرَسُوْلَهٗ وَيَتَعَدَّ حُدُوْدَهٗ يُدْخِلْهُ نَارًا خَالِدًا فِيْهَا ۖ وَلَهٗ عَذَابٌ مُّهِيْنٌ ﴿١٤﴾

(१४) र जो व्यक्ति अल्लाह (तआला) को र रसूल (सल्लल्लाहु अलैहि वसल्लम) को अवज्ञा गर्दछ र त्यसका निर्धारित सीमाहरूको उल्लंघन गर्दछ, त्यसले त्यसलाई नरकमा हालिदिनेछ, जसमा त्यो सधैं रहनेछ । यस्ताको लागि नै अपमानित यातना छ ।

وَالّٰتِيْ يَاْتِيْنَ الْفَاحِشَةَ مِنْ نِّسَآئِكُمْ فَاسْتَشْهِدُوْا عَلَيْهِنَّ اَرْبَعَةً مِّنْكُمْ ۚ فَاِنْ شَهِدُوْا فَاَمْسِكُوْهُنَّ فِي الْبُيُوْتِ حَتّٰى يَتَوَفّٰهُنَّ الْمَوْتُ اَوْ يَجْعَلَ اللّٰهُ لَهُنَّ سَبِيْلًا ﴿١٥﴾

(१५) तिम्रा स्त्रीहरू मध्येबाट जो व्यभिचार गर्दछन् उनीमाथि आफूहरू मध्येबाट चार साक्षी उपलब्ध गर, यदि उनीहरू साक्ष्य दिन्छन् भने ती स्त्रीहरूलाई घरमा बन्दी बनाइदेउ, यहाँसम्मकि मृत्युले तिनको आयुलाई पूर्ण गरिदेओस् ।[1] अथवा अल्लाह तआलाले उनीहरूका लागि कुनै अन्य मार्ग निकालोस् ।[2]

[1]यो व्यभिचारी नारीहरूको त्यो दण्ड हो जुन इस्लामको प्रारम्भिक युगमा जब व्यभिचारको दण्ड निर्धारित भएको थिएन, सामयिक रूपले निर्धारित गरिएको थियो, यहाँ यो पनि स्मरणीय छ कि अरबी भाषामा एकदेखि दससम्मको गिन्तीमा यो प्रमाणित नियम छ कि गिन्ती पुलिङ्ग हुनेछ भने गणित स्त्रीलिङ्ग थियो गिन्ती स्त्रीलिङ्ग छ भने गणित पुलिङ्ग, यहाँ (أربعة) चार को गिन्ती स्त्रीलिङ्ग हो, यसकारण यसको गणित जुन यहाँ विचर्चित छैन तथा लिप्त छ, निश्चय पुलिङ्ग हुनेछ र त्यो (पुरुष हो) जसबाट स्पष्टरूपले यो विदित हुन्छ कि व्यभिचार प्रमाणको लागि चार पुरुष साक्षी हुनु आवश्यक छ । मानौं जस्तो व्यभिचारको दण्ड कडा निर्धारित गरिएको छ, यसको प्रमाणको लागि पनि कडा प्रतिबन्ध लगाइएको छ अर्थात् चार मुसलमान पुरुषको गवाही बिना जसले आँखाले देखेका छन् धार्मिक दण्डलाई प्रमाणित गर्नु असम्भव छ ।

[2]यसबाट व्यभिचारको त्यो यातना अभिप्राय छ जुन पछि निर्धारित गरियो अर्थात् विवाहित व्यभिचारी पुरुष-स्त्रीको लागि रजम अर्थात् ढुङ्गाले मारिहाल्नु तथा अविवाहित व्यभिचारी पुरुष-स्त्रीको सय-सय कोर्राको दण्ड, जसको व्याख्या सूरः नूर तथा सहीह हदीसहरूमा वर्णित छ ।

وَالَّذٰنِ يَاْتِيٰنِهَا مِنْكُمْ فَاٰذُوْهُمَا ۚ فَاِنْ تَابَا وَاَصْلَحَا فَاَعْرِضُوْا عَنْهُمَا ۗ اِنَّ اللّٰهَ كَانَ تَوَّابًا رَّحِيْمًا ﴿١٦﴾

(१६) र तिमीमध्ये जुन दुई व्यक्ति यस्तो काम गर्दछन्,[1] उनीहरूलाई कष्ट देउ ।[2] यदि उनीहरू क्षमा माँग्दछन् तथा सुधार गर्दछन्, त उनीहरूबाट मुख फर्काइहाल । निःसन्देह अल्लाह (तआला) क्षमा स्वीकार गर्नेवाला तथा दयावान छ ।

اِنَّمَا التَّوْبَةُ عَلَى اللّٰهِ لِلَّذِيْنَ يَعْمَلُوْنَ السُّوْٓءَ بِجَهَالَةٍ ثُمَّ يَتُوْبُوْنَ مِنْ قَرِيْبٍ فَاُولٰٓئِكَ يَتُوْبُ اللّٰهُ عَلَيْهِمْ ۗ وَكَانَ اللّٰهُ عَلِيْمًا حَكِيْمًا ﴿١٧﴾

(१७) अल्लाह तआला मात्र ती मानिसहरूको क्षमा स्वीकार गर्दछ जो अज्ञान भएको कारण नराम्रो कुरो गर्दछन् र शीघ्र नै त्यसबाट रोकिन्छन् र क्षमा माँग्दछन् त अल्लाह तआला पनि उनको क्षमा स्वीकार गर्दछ । अल्लाह (तआला) बडो ज्ञानी बुद्धिमान छ ।

وَلَيْسَتِ التَّوْبَةُ لِلَّذِيْنَ يَعْمَلُوْنَ السَّيِّاٰتِ ۚ حَتّٰٓى اِذَا حَضَرَ اَحَدَهُمُ الْمَوْتُ قَالَ اِنِّيْ تُبْتُ الْـٰٔنَ وَلَا الَّذِيْنَ يَمُوْتُوْنَ وَهُمْ كُفَّارٌ ۗ اُولٰٓئِكَ اَعْتَدْنَا لَهُمْ عَذَابًا اَلِيْمًا ﴿١٨﴾

(१८) र उनीहरूको क्षमा स्वीकार छैन, जो नराम्रो कुरा गरिरहन्छन् यहाँसम्मकि उनीहरूमध्ये कसैको मृत्यु निकट आइपुग्छ त भन्नथाल्छ कि मैले अब क्षमा माँगे ।[3] तिनको क्षमा पनि स्वीकार हुँदैन जो कुफ्रको स्थितिमा मर्छन् । यिनै मानिसहरू हुन् जसका लागि हामीले कठोर यातना तयार गरेका छौं ।

[1]केहीले यसबाट बालमैथुनको अर्थ लिएका छन् । अर्थात् दुई पुरुषहरूको परस्पर संभोग तथा केहीले यसबाट कुमारी स्त्री-पुरुष लिएका छन् र यसभन्दा पूर्वको आयतलाई विवाहितको साथ विशेष गरेका छन् तथा केहीले यस वचनबाट तात्पर्य पुरुष-स्त्री लिएका छन्, तिनी कुमार हुन् अथवा विवाहित इब्ने जरीरले दोस्रो अर्थलाई प्रधानता दिनुभएको छ । तथा प्रथम आयतमा वर्णित दण्डलाई सूरः नूरमा वर्णित दण्डबाट निरस्त मान्नु भएको छ । (तफ़सीर तबरी)

[2]अर्थात् मुखले हप्काउनु, गाली गर्नु र धिक्कार्नु अथवा हातले केही कुटपीट गर्नु र अब यो निरस्त छ ।

[3]यसबाट स्पष्ट छ कि मृत्युको समयको क्षमा-याचना अस्वीकृत छ, जस्तो कि हदीसमा पनि आउँछ, जसको विवरण *आले-इमरानका* आयत ९ मा व्यतीत भइसक्यो ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لَا يَحِلُّ لَكُمۡ أَن تَرِثُواْ ٱلنِّسَآءَ كَرۡهٗاۖ وَلَا تَعۡضُلُوهُنَّ لِتَذۡهَبُواْ بِبَعۡضِ مَآ ءَاتَيۡتُمُوهُنَّ إِلَّآ أَن يَأۡتِينَ بِفَٰحِشَةٖ مُّبَيِّنَةٖۚ وَعَاشِرُوهُنَّ بِٱلۡمَعۡرُوفِۚ فَإِن كَرِهۡتُمُوهُنَّ فَعَسَىٰٓ أَن تَكۡرَهُواْ شَيۡـٔٗا وَيَجۡعَلَ ٱللَّهُ فِيهِ خَيۡرٗا كَثِيرٗا ⑲

(१९) हे निष्ठावानहरू ! तिम्रा लागि यो वैध छैन कि स्त्रीहरूका सम्पत्तिको जबरजस्ती वारिस (उत्तराधिकार) बन,[१] उनीहरूलाई यसकारण रोक कि जे दिएका छौ, त्यसबाट केही लेउ ।[२] परन्तु यदि तिनीहरू खुल्लारुपले अशिष्ट कर्म गर्दछन् भने त्यो अर्कै कुरा हो । तिनीहरूसँग राम्रो व्यवहार गर,[३] यद्यपि तिनीहरू तिमीलाई राम्रो लाग्दैनन् परन्तु अति संभव छ कि एउटा कुरा तिमीलाई मनपर्दैन, र अल्लाहले त्यसमा धेरै हितकारी कुरा राखेको होस् ।[४]

[१]इस्लामभन्दा पूर्व नारीमाथि यो अत्याचार पनि हुन्थ्यो कि कसैको निधन उपरान्त त्यसका घरका मानिसहरू त्यसको धनको समान त्यसको पत्नीको पनि बलपूर्वक उत्तराधिकारी बनिहाल्थे तथा स्वयं आफ्नो इच्छाले उसको सहमतिविना उसित विवाह गरिहाल्थे अथवा आफ्नो भाई-भतिजासित त्यसको विवाह गरिदिन्थे, यहाँसम्मकि सौतेला पुत्र आफ्नो मृत पिताकि पत्नीसित विवाह गरिहाल्थ्यो अथवा यदि चाहेको खण्डमा त्यसलाई कोहीसित विवाह गर्न अनुमति दिंदैनथे र त्यो उमेरभरि त्यसै निर्वाह गर्नको लागि बाध्य हुन्थ्यो । इस्लामले अत्याचारका यी सबै रूपलाई वर्जित गरिदियो ।

[२]नारीमाथि एउटा अत्याचार यो पनि गरिन्थ्यो कि यदि पति कहाँ पत्नीमा रुचि लिइदैनथ्यो र त्यसबाट मुक्त हुन चाहन्थ्यो त स्वयं विवाह विच्छेद गर्दैनथ्यो । (जुनप्रकार इस्लामले) तलाक़ (विवाह-विच्छेद) को अनुमति दिएको छ) अपितु त्यसलाई अति आतंकित गर्दथ्यो ताकि त्यो बाध्य भएर महर (स्त्री धन) अथवा जे पनि त्यसलाई पतिले दिएको छ, स्वयं वापस गरी त्यसबाट मुक्ति प्राप्त गर्नलाई प्राथमिकता देओस् ।

[३]खुल्ला नराम्रो कुरासित तात्पर्य व्यभिचार अथवा अपवाद एवं अवज्ञा छ, यी दुबै दशामा पतिलाई यो अनुमति दिइयो कि त्योसँग यस्तो व्यवहार गरोस् कि त्यो उसले दिएको धन अथवा स्त्रीधन (महर) फिर्ता गरी खुलाअ गराउनमा बाध्य भइहालोस् (जस्तो कि खुलाअमा पतिलाई महर फिर्ता लिने अधिकार दिइएको छ । (हेर्नुस् सूर: बकर:-२२९)

[४]यो पत्नीसँग सद्व्यवहारको त्यो आदेश हो जसमा कुरआनले धेरै जोड दिएको छ । तथा हदीसमा पनि नबी (सल्लल्लाहु अलैहि वसल्लम) ले यसलाई अति महत्व दिनुभएको छ, एक हदीसमा आयतको त्यसै भावार्थलाई यसप्रकार वर्णित गरिएको छ ।

وَإِنْ أَرَدْتُّمُ اسْتِبْدَالَ زَوْجٍ مَّكَانَ زَوْجٍ وَآتَيْتُمْ إِحْدَاهُنَّ قِنطَارًا فَلَا تَأْخُذُوا مِنْهُ شَيْئًا ۚ أَتَأْخُذُونَهُ بُهْتَانًا وَإِثْمًا مُّبِينًا ⑳

(२०) र यदि तिमी एक पत्नीको साटो दोस्रो पत्नी ल्याउन नै चाहन्छौ र उनीहरूमध्ये कसैलाई तिमीले धनको कोष दिएका छौ भने पनि त्यसबाट केही न लेउ ।[1] के तिमी उसलाई लान्छना लगाई खुल्ला पापले लिनेछौ ।

وَكَيْفَ تَأْخُذُونَهُ وَقَدْ أَفْضَىٰ بَعْضُكُمْ إِلَىٰ بَعْضٍ وَأَخَذْنَ

(२१) र तिमी त्यसलाई कसरी लिनेछौ ? जकबि तिमी एक-अर्कासित सम्पर्क (सहबास) गरिसकेका छौ ।[2] र ती स्त्रीहरुल

لَا يَفْرَكْ مؤمنٌ مؤمنةً إن سَخِطَ منها خُلُقًا، رضيَ منها آخَرَ

"मोमिन पतिले मोमिन पत्नीसित बैर मात्र नराखोस् यदि त्यसको एउटा व्यवहार अप्रिय छ भने, त्यसको अन्य व्यवहार प्रिय पनि हुन्छ ।" (सहीह मुस्लिम किताबुल रिजाअ:)

अभिप्राय यो छ कि निर्लज्जता तथा अवज्ञाको अतिरिक्त यदि पत्नीमा केही अन्य कमी छ, जसको कारण पति त्यसलाई अप्रिय मान्दछ भने त्यसलाई तुरुन्तै तलाक़ नदेओस् वरु धैर्य तथा सहनले काम लेओस् । सम्भव छ कि अल्लाहले उसमा त्यसको निम्ति ठूलो भलाई पैदा गरिदेओस् अर्थात् राम्रो सन्तान पैदा गरिदेओस् अथवा त्यसको कारण व्यवसायमा विभूति पैदा गरिदेओस् इत्यादि । दुखको कुरो छ कि मुसलमान कुरआन र हदीसका यी निर्देशहरूका विपरीत सानो-तिनो कुरामा आफ्ना पत्नीहरूलाई तलाक़ दिइहाल्छन् तथा यसप्रकार इस्लामबाट प्रदत्त तलाक़ अधिकारलाई निर्दयताले प्रयोग गर्दछन् । जबकि यो अधिकार अति आवश्यक अवस्थामा प्रयोगको लागि दिइएको थियो न कि घर उजाड्न, पत्नीहरूमाथि अत्याचार गर्न एवं बच्चाहरूको जीवन नाश गर्नको लागि । यसको अतिरिक्त यिनीहरू इस्लामको अपमानको पनि हेतु बन्दछन् कि इस्लामले पुरुषहरूलाई तलाक़को अधिकार दिएर नारीहरूमाथि अत्याचार गर्ने अधिकार दिइहाल्यो, यसप्रकार इस्लामको एक ठूलो विशेषतालाई नराम्रो सिद्ध गरिन्छ ।

[1]स्वयं तलाक़ दिने अवस्थामा महर फिर्ता लिनलाई कठोरताले रोकिएको छ, (قنطار) धनको कोष तथा अत्याधिक धनलाई भन्दछन् अर्थात जतिसुकै महर दिइएको होस्, फिर्तालिन धनलाई भन्दछन् अर्थात् जतिसुकै महर दिइएको होस्, फिर्तालिन सक्दैन । यदि यस्तो गर्नेछौ भने यो अत्याचार सपष्ट पाप हुनेछ ।

[2]एक-अर्कालाई भेटिसकेका छौ भन्ने कुराको अर्थ सहवाद हो । जसलाई अल्लाह तआलाले सांकेतिक रूपले वर्णन गरेको छ ।

مِنكُم مِّيثَٰقًا غَلِيظًا ﴿٢١﴾

तिमीसित घनिष्ट वचन लिइसकेका छन् ।[1]

وَلَا تَنكِحُوا۟ مَا نَكَحَ ءَابَآؤُكُم مِّنَ ٱلنِّسَآءِ إِلَّا مَا قَدْ سَلَفَ ۚ إِنَّهُۥ كَانَ فَٰحِشَةً وَمَقْتًا وَسَآءَ سَبِيلًا ﴿٢٢﴾

(२२) र ती स्त्रीहरूसँग विवाह नगर, जोसित तिम्रा पिताहरूले विवाह गरेका छन् ।[2] परन्तु विगतमा भइसकेका बाहेक, यी निर्लज्जताका कार्य र द्वेषका कारण हुन् र साह्रै नराम्रो मार्ग हो ।

حُرِّمَتْ عَلَيْكُمْ أُمَّهَٰتُكُمْ وَبَنَاتُكُمْ وَأَخَوَٰتُكُمْ وَعَمَّٰتُكُمْ وَخَٰلَٰتُكُمْ

(२३) तिमीलाई हराम (अवैध) गरिए[3] तिम्रा माताहरू तथा तिम्रा छोरीहरू तथा तिम्रा दिदी-बहिनीहरू तथा

[1]सुदृढ वचनबाट त्यस वचनको तात्पर्य हो, जुन विवाहको समय पुरुषबाट लिइन्छ कि तिमी यसलाई राम्रो प्रकारले राख्नु अथवा नम्रताका साथ छाड्नु ।

[2]अज्ञान युगमा सौतेला पुत्र आफ्नो पिताकी पत्नीसँग विवाह गरिहाल्थे, त्यसबाट यहाँ रोकिदैछ कि यो बडो निर्लज्जताको काम हो । ﴿وَلَا تَنكِحُوا۟ مَا نَكَحَ ءَابَآؤُكُم﴾ साधारण आदेश हो जुन यस्तो स्त्रीसँग विवाहलाई पनि वर्जित घोषित गरिराखेको छ जोसित उसको पिताले विवाह गऱ्यो तर समागम भन्दा पूर्व तलाक् दिइहाल्यो, यो कुरा आदरणीय इब्ने अब्बासबाट उद्धृत छ, तथा धर्म विशेषज्ञ यसैलाई मान्छन् । (तफ़सीर तबरी)

[3]जुन स्त्रीहरूसँग विवाह निषेध छ, तिनको विवरण दिइँदैछ। यिनीहरूमा सात निषेधित स्त्रीहरू वंशज छन्, सात दुग्ध कर्मले तथा चार ससुराली यिनीबाहेक हदीसबाट प्रमाणित छ कि भतिजी तथा फूफी एवं भतिजी तथा खालालाई एकसाथ विवाह गरिराख्नु वर्जित छ। सात वशज निषेधित स्त्रीहरू हुन्: माताहरु, पुत्रीहरू, बहिनीहरू, फूफीहरू, आमाका दिदी-बहिनीहरू, भतिजी एवं भगिनी, दुग्ध कर्मले निषेधित सात दुग्ध कर्मबाट आमा त्यसका पुत्रीहरू, दिदी-बहिनीहरू, फूफीहरु, आमाका दिदी-बहिनीहरू। दुग्ध कर्मले भतिजीहरू, भगिनीहरू हुन्। ससुराली निषेधित स्त्रीहरू: सासू, सम्भोगित पत्नीको पहिला पतिबाट पुत्रीहरू, पुत्रवधु तथा दुई साखै दिदी-बहिनीहरू एकसाथ विवाह गरिराख्नु, यसका अतिरिक्त पिताकी विवाहिता जसको चर्चा यसभन्दा पहिलाको आयतमा भईसकेको छ तथा हदीसका अनुसार स्त्री जबसम्म विवाहमा छ, त्यसकी फूफी तथा आमाकी दिदी-बहिनी एवं त्यसकी भतिजी एवं भान्जीसित पनि विवाह वर्जित छ, वंशज निषेधित स्त्रीहरूको सूचीमा आमाको आमा, तिनका हजूरआमा, तथा पिताका आमाहरू तलसम्म सम्मिलित छन्, व्यभिचारबाट जन्मेको पुत्री, पुत्री हो वा होइन यसमा मतभेद छ तीनवटै इमाम धर्म-विशेषज्ञ त्यसलाई पुत्री मान्दछन् तथा उसित विवाह निषेध मान्दछन्। इमाम शाफ़ई भन्दछन् कि त्यो धर्म विधान अनुसार होइन अतः त्यो जुन प्रकार ﴿يُوصِيكُمُ ٱللَّهُ فِىٓ أَوْلَٰدِكُمْ﴾ (अल्लाह तिमीलाई सन्तानमा त्यक्त धन विभाजित गर्न आदेश गर्दछ) को अर्न्तगत छैन तथा सर्वसम्मतिले उत्तराधिकारी होइन। यसैप्रकार यस आयतको अर्न्तगत पनि होइन। (والله أعلم) "दिदी-बहिनीहरू" साखै होउन अथवा आमाबाट अथवा बाबुबाट, "फूफीहरू" मा पिताको र सबै मूल पुरुष (अथवा नाना, दादा) का तीनै प्रकारका बहिनीहरु आउँछन्

"आमाको दिदी-बहिनीहरू" यसको अर्न्तगत आमाकी तथा सबै मूल स्त्री (अर्थात् दादी, नानी) को तीनै प्रकारको दिदी-बहिनीहरू पदर्छन, "भतिजीहरू" मा तिनै प्रकारका दाज्यू-भाईहरूको सन्तान सोभै परून अथवा माध्येमबाट, यस्तै "भगिनीहरूमा तीनै प्रकारकी बहिनीहरूको सन्तान स्वयं उनैको होउन अथवा उनको सन्तानको सन्तान सम्मिलित छन् ।

दोस्रो प्रकार दुग्ध कर्मले निषेधित स्त्रीहरू– दूध खुवाउने आमा, जसको दूध स्तनपानको अवधिमा पिएको छ (अर्थात् दुई वर्षभित्र) दुग्धबाट दिदी-बहिनी जसलाई तिम्रो साखै आमा अथवा दूध खुवाउने आमा जसले दूध खुवायो, तिम्रो साथमा खुवायो अथवा तिमीभन्दा पहिला वा पछि तिम्रा अन्य भाइ-बहिनीको साथ खुवायो अथवा जुन स्त्रीकी साखै आमा अथवा दूधवाली आमाले तिमीलाई दुग्धपान गरायो, चाहे विभिन्न समयमा खुवाइएको होस्, दुग्धले पनि उनी साखै वर्जित भइहाल्नेछन् जो वंशले वर्जित हुन्छन्, यसको विवरण यो हो कि दुग्ध खुवाउनेवाली आमाको स्वयं आफ्नो सन्तान, तथा जसलाई स्तनपान गराएको छ स्तनपान गर्नेवाला शिशुका भाई-बहिनी, दूध खुवाउने माताको पति, उसको पिता तथा त्यस पुरुषका दिदी-बहिनीहरू, त्यसका फूफीहरु, त्यस स्त्रीका बहिनीहरू, आमाका दिदी-बहिनीहरू र त्यस स्त्रीको ज्येष्ठ देवर, त्यसका काका, ताया बनिहाल्नेछन् । र यस स्तनपायी शिशुका साखै भाइ-बहिनी आदि यस घरानामा स्तनपानको कारण वर्जित हुनेछैन ।

तेस्रो प्रकार, ससुराली निषेधित स्त्रीहरू–पत्नीकी आमा अर्थात सासू (पत्नीकी हजूरआमा, दादी पनि यसमा सम्मिलित छन्) यदि कसैले स्त्रीसित विवाह गरी बिना समागम विवाह विच्छेद गरिहाल्यो तैपनि उसकी आमा (सासु) सित विवाह वर्जित हुनेछ तर कुनै स्त्रीसित विवाह गरी विना संभोग "तलाक़" दिइसकेको छ भने, त्यसकी पुत्रीसित त्यसको विवाह वैध हुनेछ । (फ़तहुल क़दीर)

रबीबः पत्नीको पहिलो पतिबाट पुत्री यसको निषेध प्रतिबन्धित छ अर्थात उसकी मातासित संभोग गरिहालेको छ भने, "रबीबा" सित विवाह वर्जित अन्यथा वर्जित हुनेछन, (فى حجوركم) (त्यो रबीबः जसको पालनपोषण तिम्रो काखमा भएको छ) यो बन्धन साधारण अवस्थाको कारण हो प्रतिवन्धको रूपमा होइन, यदि त्यो पुत्री कुनै अन्य स्थानमा पालिने छ, अथवा निवास गर्नेछ, तैपनि विवाह वर्जित हुनेछ, पत्नीलाई हलील: भनिन्छ किनभने अर बीमा त्यसको अर्थ वर्लने ठाउँ हो र पत्नी पतिसँग निवास तथा प्रस्थान गर्दछे, पुत्रहरूमा र पौत्र र नातिहरू पनि आउँछन् अर्थात उनका पत्नीहरूसित पनि विवाह वर्जित हुनेछ, यसैप्रकार दूध खुवाइएका सन्तानका जोडी पनि निषेध हुनेछन् (من أصلابكم) (तिम्रा साखै पुत्रका पत्नीहरू) को बन्धनबाट यो प्रकाशित भइहाल्यो कि लेपालकका पत्नीहरूसित विवाह निषेध छैन, दुई दिदी-बहिनीहरू साखै होउन अथवा दूधको नाताले उनीहरूसित विवाह एक समयमा विवाह निषेध छ । किन्तु एकको निधन अथवा तलाक़को दशामा इद्दत पूरा भए पश्चात अर्कोसित विवाह उचित छ । यसैप्रकार चार पत्नीहरू मध्येबाट एकलाई तलाक़ दिए पश्चात पाँचौंसित विवाहको अनुमति छैन, जबसम्म तलाक़ प्राप्त स्त्री इद्दद पूरा गर्दैन ।

وَبَنٰتُ الْاَخِ وَبَنٰتُ الْاُخْتِ وَ اُمَّهٰتُكُمُ الّٰتِيْٓ اَرْضَعْنَكُمْ وَاَخَوٰتُكُمْ مِّنَ الرَّضَاعَةِ وَاُمَّهٰتُ نِسَآىِٕكُمْ وَرَبَآىِٕبُكُمُ الّٰتِيْ فِيْ حُجُوْرِكُمْ مِّنْ نِّسَآىِٕكُمُ الّٰتِيْ دَخَلْتُمْ بِهِنَّ ز فَاِنْ لَّمْ تَكُوْنُوْا دَخَلْتُمْ بِهِنَّ فَلَا جُنَاحَ عَلَيْكُمْ ز وَحَلَآىِٕلُ اَبْنَآىِٕكُمُ الَّذِيْنَ مِنْ اَصْلَابِكُمْ لا وَاَنْ تَجْمَعُوْا بَيْنَ الْاُخْتَيْنِ اِلَّا مَا قَدْ سَلَفَ ط اِنَّ اللّٰهَ كَانَ غَفُوْرًا رَّحِيْمًا ﴿٢٣﴾ لا

तिम्रा फूफीहरू तथा तिम्रा मौसिहरू (आमाका दिदी-बहिनीहरू) एवं दाज्यू-भाईका छोरीहरू एवं बहिनी-दिदीका छोरीहरू र तिम्रा ती माताहरू जसले तिमीलाई दूध खुवाएका हुन् । तथा तिम्रा दूधका भागीदार दिदी-बहिनीहरू एवं तिम्रो सासू तथा तिम्रा ती पालन-पोषण गरिएका केटीहरू जो तिम्रा काखमा छन्, तिम्रा ती स्त्रीहरूबाट जोसित तिमी सहवास गरिसकेका छौ । हो, यदि तिमीले उनीसित सम्भोग गरेका छैनौ भने तिमीलाई कुनै पाप छैन र तिम्रा आफ्ना साखै दिदी, छोराहरूका पत्नीहरू र तिम्रो दुई साखै बहिनीहरूसित एकसाथ विवाह गर्नु । हो, जे भइसक्यो, सो भइसक्यो, निःसन्देह अल्लाह तआला क्षमाशील दयालु छ ।

**विचारणीय :** व्यभिचारबाट निषेध सिद्ध हुनेछ अथवा छैन, यसमा विद्वानहरूको मतभेद छ । अधिकांशको विचार छ कि यदि कसैले कुनै स्त्रीसँग व्यभिचार गऱ्यो भने त्यसकारणले त्यो स्त्री उसलाई वर्जित हुनेछैन । यसैप्रकार यदि आफ्नी पत्नीकी माता (सासू) सित अथवा उसकी पुत्रसित (जो अर्को पतिबाट छ) व्यभिचार गरिहाल्नेछ भने उसकी पत्नी उसलाई वर्जित हुनेछैन । (तर्कहरूको लागि फ़तहुल क़दीर भाग-१ हेर्नुस्) अहनाफ़ तथा अन्य विद्वानहरूको विचारमा व्यभिचारले पनि निषेध सिद्ध भइहाल्नेछ । प्रथम मतलाई केही हदीसहरूबाट प्रमाण प्राप्त छ ।

وَالْمُحْصَنٰتُ مِنَ النِّسَآءِ اِلَّا مَا مَلَكَتْ اَيْمَانُكُمْ ۚ كِتٰبَ اللّٰهِ عَلَيْكُمْ ۚ وَاُحِلَّ لَكُمْ مَّا وَرَآءَ ذٰلِكُمْ اَنْ تَبْتَغُوْا بِاَمْوَالِكُمْ مُّحْصِنِيْنَ غَيْرَ مُسٰفِحِيْنَ ؕ

(२४) र (तिम्रा निम्ति) विवाहित नारीहरू (निषेध गरिएका छन्) तर जुन (दासीं) तिम्रा स्वामित्वमा छन्,[1] यो आदेश तिमीलाई अल्लाहले अनिवार्य गरिदिएको छ तथा यिनीबाहेक अन्य स्त्रीहरू तिम्रा निम्ति उचित गरिए कि आफ्नो महर (धन) ले उनीसित विवाह गर,

[1]कुर्आनमा (إحصان) चारवटा अर्थमा प्रयोग गरिएको छ (१) विवाह (२) स्वतन्त्रता (३) पवित्रता (४) तथा इस्लाम, यस आधारमा (محصنات) का चार अर्थ छन् । (१) विवाहित स्त्रीहरू (२) स्वतन्त्र स्त्रीहरू (३) चरित्रवान स्त्रीहरू (४) तथा मुसलमान स्त्रीहरू । यहाँ तात्पर्य पहिलो अर्थसित छ । यसको अवतरणको विशेषता यो हो कि जब केही युद्धहरुमा केही काफिरहरूका स्त्री पनि मुसलमानहरूको बन्दी भएर आईन त मुसलमान उनीसित सहवास गर्ने कुरोमा राम्रो आभास गरिराखेको थिएन किनभने उनीहरू विवाहित थिइन् । सहाबाले नवी (सल्लल्लाहु अलैहि वसल्लम) सित यसबारे सोधे, जसमा यो आयत उत्र्यो । (इब्ने कसीर) यसवाट यो ज्ञान भयो कि युद्धमा प्राप्त हुने काफिर स्त्रीहरू जब मुसलमानहरूका दासी हुन्छन्, त विवाहित भए उपरान्त पनि उनीसित सहवास गर्नु उचित छ । तर गर्भाशयको स्वच्छता आवश्यक छ, अर्थात् एक मासिक धर्म पश्चात अथवा यदि गर्भवती छिन् त प्रसव पश्चाल सम्भोग गरून् ।

**दासताको समस्या :** कुर्आनको अवतरणको समय दास-दासीको प्रचलन सामान्य थियो जसलाई कुर्आनले वन्द गरेन, तर उनको लागि त्यो कार्य प्रणाली निर्धारित गऱ्यो जसबाट दास तथा दासीहरूलाई अधिकभन्दा अधिक सुविधा प्राप्त हुन सकोस् ताकि दासताको अवहेलना होस् । यसका दुई माध्यम थिए । एक त परिवारका केही पुरुष-स्त्री सदियौंदेखि वेचिन्थे, यही किनिएका पुरुष-स्त्री दास तथा दासीहरू कहलाइन्थे । मालिकलाई उनीवाट हरप्रकारको लाभ उठाउने अधिकार थियो । दोस्रो माध्यम युद्धमा वन्दीहरूको थियो । काफिरहरूका बन्दी स्त्रीहरूलाई मुसलमानहरूमा वितरण गरिन्थ्यो, उनीहरू तिनका दासी वनेर उनको पासमा रहन्थे । त्यस कालमा वन्दीहरूका लागि कुनै अन्तर्राष्ट्रिय नियम थिएन, यसकारण यो त्यसबेलाको श्रेष्ठ समाधान थियो । किनभने यदि उनीहरूलाई समाजमा त्यसै स्वतन्त्र छोडिदिएको भए, समाजमा उनीहरूद्वारा कैयन् कुकर्महरू उत्पन्न हुन्थे (विस्तारको लागि हेर्नुस किताबुल रिक्क फिल इस्लाम "इस्लाममा दासताको वास्तविकता" लेखक मौलाना सईद अकवरावादी) वस्तुत: मुसलमान विवाहित स्त्रीहरू त्यसै अवैध छन्, तैपनि काफिर स्त्रीहरू पनि निषेध छन् जवसम्म उनीहरूको स्वामित्वमा आउँदैनन् । यस स्थितिमा गर्भाशय स्वच्छता पश्चात नै उनी तिनका लागि वैध छन् ।

فَمَا اسْتَمْتَعْتُمْ بِهٖ مِنْهُنَّ فَاٰتُوْهُنَّ اُجُوْرَهُنَّ فَرِيْضَةً ؕ وَلَا جُنَاحَ عَلَيْكُمْ فِيْمَا تَرٰضَيْتُمْ بِهٖ مِنْۢ بَعْدِ الْفَرِيْضَةِ ؕ اِنَّ اللّٰهَ كَانَ عَلِيْمًا حَكِيْمًا ﴿٢٤﴾

व्यभिचारको लागि होइन, पवित्रताको लागि[1] अत: जसबाट तिमी लाभ उठाउँछौ, उनीहरुलाई उनको महर देऊ,[2] तथा तिमी निर्धारित महर पश्चात परस्पर सहमतिबाट जे चाहन्छौ तय गर, तिमीलाई कुनै दोष छैन,[3] वस्तुत: अल्लाह तआला बुद्धिमान छ ।

وَمَنْ لَّمْ يَسْتَطِعْ مِنْكُمْ طَوْلًا اَنْ يَّنْكِحَ الْمُحْصَنٰتِ الْمُؤْمِنٰتِ فَمِنْ مَّا مَلَكَتْ اَيْمَانُكُمْ مِّنْ فَتَيٰتِكُمُ

(२५) तथा तिमीमध्ये जो स्वतन्त्र मुसलमान नारीसित विवाहको योग्यता राख्दैन, त्यो त्यस मुसलमान दासीसित (बिहे गरोस्) जो तिम्रो स्वामित्वमा छ । अल्लाह तिम्रा कर्महरूसित

[1]अर्थात् वर्णित कुरआन र हदीसद्वारा वर्जित स्त्रीहरूको अतिरिक्त शेष सबैसित विवाह गर्नु उचित छ । परन्तु त्यसमा चार विशेषताहरु हुनुपर्छ । प्रथम यो कि मंगनी गर أن تبتغوا अर्थात् दुबै पक्षद्वारा ग्रहण तथा स्वीकार हुनुपर्छ । द्वितीय यो कि माल अर्थात् महर तिर्न स्वीकार होस्, तृतीय यो कि उनलाई विवाह बन्धनमा बाँध्नु उद्देश्य हुनुपर्छ, केवल संभोगको विचार नहोस् (जस्तो व्यभिचार अथवा त्यस मुतआमा हुन्छ, जुन शियाहरूमा प्रचलित छ अर्थात् लिङ्गीय इच्छाहरूको सन्तुष्टिको लागि केही दिन अथवा केही घण्टाको लागि विवाह) तथा चतुर्थ यो कि गुप्त प्रेम नहोस् बरु साक्षीहरुको उपस्थितिमा विवाह होस् । यी चार शर्तहरू यस आयतबाट उपलब्ध हुन्छन् । यसबाट जहाँ मुतआको खण्डन हुन्छ, त्यहीं प्रचलित हलालाको प्रचलन पनि अनुचित सिद्ध हुन्छ किनभने यसको उद्देश्य पनि स्त्रीलाई स्थाई विवाहको बन्धनमा बाँध्नु हुँदैन, यो केवल एक रातको लागि निर्धारित तथा प्रचलित छ ।

[2]यो यस कुरामा जोड छ कि जुन स्त्रीहरूसित तिमी विवाह धार्मिक रुपले गरी लाभान्वित तथा सुख प्राप्त गर्दछौ, उनीहरूलाई उनको निर्धारित महर अवश्य दिदेउ ।

[3]यसमा आपसको सहमतिले महरमा कमी-बढीको अधिकार दिएको छ ।

<u>नोट</u> : (استمتاع) को शब्दबाट शियाहरू "मुतआविवाह" को अर्थमा लिन्छन्, जबकि यसको तात्पर्य विवाह पश्चात सहवास तथा संभोगको लाभ हो, जस्तो कि हामीले लेखेका छौं । अवश्य मुतआ इस्लामको आरम्भिक कालमा प्रचलित रहेको छ र त्यसको औचित्य यस आयतको आधारमा थिएन, बरु इस्लामको पूर्व समयदेखि नै चलिआइराखेको थियो, अनि नबी (सल्लल्लाहु अलैहि वसल्लम) ले अत्यन्त स्पष्ट शब्दहरूमा यसलाई केयामत सम्मका लागि अवैध गरिदिनु भयो । जस्तो कि सहीह हदीसमा यसको विस्तृत विवरण विद्यमान छ ।

الْمُؤْمِنٰتِ ؕ وَاللّٰهُ اَعْلَمُ بِاِيْمَانِكُمْ ؕ بَعْضُكُمْ مِّنْ بَعْضٍ ۚ فَانْكِحُوْهُنَّ بِاِذْنِ اَهْلِهِنَّ وَ اٰتُوْهُنَّ اُجُوْرَهُنَّ بِالْمَعْرُوْفِ مُحْصَنٰتٍ غَيْرَ مُسٰفِحٰتٍ وَّلَا مُتَّخِذٰتِ اَخْدَانٍ ۚ فَاِذَاۤ اُحْصِنَّ فَاِنْ اَتَيْنَ بِفَاحِشَةٍ فَعَلَيْهِنَّ نِصْفُ مَا عَلَى الْمُحْصَنٰتِ مِنَ الْعَذَابِ ؕ ذٰلِكَ لِمَنْ خَشِىَ الْعَنَتَ مِنْكُمْ ؕ وَاَنْ تَصْبِرُوْا خَيْرٌ لَّكُمْ ؕ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢٥﴾

पूर्णत: अवगत छ, तिमी परस्पर एउटा नै हौ, अत: तिमी उनका संरक्षकहरूको अनुमतिले उनीसित विवाह गर[1] तथा रीति अनुसार उनको महर देउ, उनी पवित्र हुनुपर्छ, व्यभिचारिणी हुनुहुँदैन, न गुप्त प्रेमी राख्नेहरू, त जब यिनी विवाहमा आउँछिन्, अनि कु-कर्म गर्छिन् भने उनलाई स्वतन्त्र नारीहरूको आधा दण्ड छ[2] यो विवाहको आदेश त्यसको लागि छ जसलाई व्यभिचारको भय छ तथा सहन गर्नु तिम्रो लागि उत्तम छ र अल्लाह क्षमाशील कृपानिधि छ ।[3]

يُرِيْدُ اللّٰهُ لِيُبَيِّنَ لَكُمْ وَيَهْدِيَكُمْ سُنَنَ الَّذِيْنَ مِنْ قَبْلِكُمْ وَيَتُوْبَ عَلَيْكُمْ ؕ وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ﴿٢٦﴾

(२६) अल्लाह (तआ़ला) तिम्रो निम्ति स्पष्ट गर्न एवं तिमीभन्दा पूर्वका (सदाचारीहरूको) मार्गदर्शन तथा तिम्रो क्षमा-याचना स्वीकार गर्न चाहन्छ र अल्लाह ज्ञाता, बुद्धिमान छ ।

وَاللّٰهُ يُرِيْدُ اَنْ يَّتُوْبَ عَلَيْكُمْ ۫ وَيُرِيْدُ الَّذِيْنَ يَتَّبِعُوْنَ الشَّهَوٰتِ

(२७) र अल्लाह तआ़ला चाहन्छ कि तिम्रो क्षमा स्वीकार गरोस् र जो

[1]यसबाट ज्ञात भयो कि दासीको मालिक नै दासीको संरक्षक हो, दासीको विवाह कोहीसित उसको आज्ञा विना गर्न सकिन्न । यसैप्रकार दास पनि मालिकको आज्ञा विना कसैसित विवाह गर्न सक्दैन ।

[2]अर्थात् दासीहरूलाई सयको सट्टा (आधा अर्थात्) पचास कोर्राको दण्ड दिइनेछ । अर्थात् उनलाई ढुङ्गाले हानेर मार्ने दण्ड दिन सकिदैंन, किनभने त्यो आधा हुन सक्दैन, तथा अविवाहित दासीलाई निन्दनीय दण्ड हुनेछ । (विस्तृत जानकारीको लागि तफ़सीर इब्ने क़सीर हेर्नुस्)

[3]अर्थात् दासीसित विवाह तिनीहरूमात्र गर्न सक्छन्, जो आफ्नो जवानीको आवेगमा नियन्त्रण गर्ने शक्ति राख्दैनन्, र कु-कर्ममा पर्नुको भय छ, यदि यस्तो भएको छैन भने त्यस समयसम्म धैर्य राख्नु श्रेष्ठ छ, जबसम्म कुनै स्वतन्त्र पारिवारिक स्त्रीसँग विवाह गर्न योग्य हुँदैन ।

أَنْ تَمِيلُوا مَيْلًا عَظِيمًا ﴿٢٧﴾

कामवासनको अधीन छन् उनीहरू चाहन्छन् कि तिमी मार्गबाट धैरे टाढा पुग ।[1]

يُرِيدُ اللَّهُ أَنْ يُخَفِّفَ عَنْكُمْ ۚ وَخُلِقَ الْإِنْسَانُ ضَعِيفًا ﴿٢٨﴾

(२८) अल्लाह तिम्रो बोझ हल्का गर्न चाहन्छ तथा मनुष्य निर्बल पैदा गरिएको छ ।[2]

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَأْكُلُوا أَمْوَالَكُمْ بَيْنَكُمْ بِالْبَاطِلِ إِلَّا أَنْ تَكُونَ تِجَارَةً عَنْ تَرَاضٍ مِنْكُمْ ۚ

(२९) हे मुसलमानहरू ! आफ्ना माल परस्पर गलत तरीकाले नखाउ,[3] परन्तु यो अर्कै कुरा हो कि तिम्रो आपसको सहमतिले व्यापार होस् ।[4] र

[1](أن تميلوا) अर्थात् सत्यवाट असत्यतिर ढल्किनु ।

[2]यस क्षीणताको कारण त्यसलाई पापमा पर्नुको अधिक सम्भावना छ । यसकारण अल्लाह तआलाले त्यसलाई यथासंभव सुविधा प्रदान गरेको छ । तिनैमध्ये दासीसित विवाह गर्नुको आज्ञा पनि छ । केहीले यस क्षीणताको सम्बन्ध स्त्रीहरूसित भनेका छन् अर्थात् स्त्रीको विषयमा क्षीण छ, यसैकारण स्त्री पनि आफ्नो मन्द बुद्धिको उपरान्त पनि पुरुषहरूलाई आफ्नो जालमा फसाईहाल्छ ।

[3](بالباطل) मा धोका, छल-कपट तथा मिसावटको अतिरिक्त त्यो सबै व्यापार पनि सम्मिलित छ, जुन गर्नबाट धार्मिक नियमहरूले निषेध गरेका छन जस्तै जुवा, ब्याज आदि । यसैप्रकार निषेध तथा हराम (अवैध) कुराहरुको व्यापार गर्नु पनि सम्मिलित छ ।

[4]यसको लागि शर्त छ कि लेनदेन वैध पदार्थको हुनुपर्छ । निषेधको व्यापार परस्पर सहमतिले पनि अनुचित नै रहनेछ । यसको अतिरिक्त सहमतिमा खियार-ए-मजलिसको पनि समस्या आउँछ अर्थात् एक-अर्काबाट बिदा नहुन्जेल, सौदा निरस्त गर्ने अधिकार रहनेछ । जस्तो कि हदीसमा छ :

البيّان بالخيارِ ما لَم يتفرَّقا

"दुवै आपसमा सौदा गर्नेवालाहरूलाई, जबसम्म बिदा हुँदैनन्, अधिकार छ ।" (सहीह बुखारी र मुस्लिम किताबुल बोयुअ)

وَلَا تَقْتُلُوٓا۟ أَنفُسَكُمْ ۚ إِنَّ ٱللَّهَ كَانَ بِكُمْ رَحِيمًا ﴿٢٩﴾

न आफुहरुलाई हत्या गर,[1] निःसन्देह अल्लाह तआ़ला तिमीमाथि कृपालु छ ।

وَمَن يَفْعَلْ ذَٰلِكَ عُدْوَٰنًا وَظُلْمًا فَسَوْفَ نُصْلِيهِ نَارًا ۚ وَكَانَ ذَٰلِكَ عَلَى ٱللَّهِ يَسِيرًا ﴿٣٠﴾

(३०) र जो व्यक्ति यो (अवज्ञा) सीमा उल्लंघन गरी तथा अत्याचारले गर्नेछ,[2] त निकट भविष्यमा हामीले उसलाई आगोमा हाल्नेछौं, र यो अल्लाहको लागि सरलतम् छ ।

إِن تَجْتَنِبُوا۟ كَبَآئِرَ مَا تُنْهَوْنَ عَنْهُ نُكَفِّرْ عَنكُمْ سَيِّـَٔاتِكُمْ وَنُدْخِلْكُم

(३१) यदि तिमी यी महापापहरूबाट बेच्दै रहनेछौ, जसबाट तिमीलाई मनाही गरिएको छ,[3] त हामील

[1]यसको तात्पर्य आत्महत्या पनि हुनसक्छ, जुन महापाप हो र पाप गर्नु पनि जुन विनाशको कारण हो, र कुनै मुसलमानको हत्या गर्नु पनि, किनभने सबै मुसलमान एक शरीर समान छन्, यसकारण उसको हत्या गर्नु पनि यस्तै छ, जस्तो आफैंले आफूलाई हत्या गरिहालेको छ ।

[2]अर्थात् निषेधाज्ञाको उल्लंघन जानी-जानी, अत्याचार र अवज्ञाकारिताले नै गर्नेछ ।

[3]महापापको परिभाषामा मतभेद छ, केहीका निकट त्यो पाप हो, जसमा दण्ड निर्धारित छ, केहीका निकट त्यो पाप जसको लागि कुरआन र हदीसमा तीव्र चेतावनी अथवा श्राप दिइएको होस्, केहीका समीप प्रत्येक त्यो कार्य जसबाट अल्लाहले अथवा त्यसका रसूल (सल्लल्लाहु अलैहि वसल्लम) ले निषेध (हराम) भएको कारणले रोक्नु भएको छ र वास्तविकता यो हो कि यिनीहरू मध्येबाट कुनै एउटा कुरा पनि कुनै पापमा पाईन्छ भने त्यो महापाप हो । हदीसहरूमा विभिन्न महापापहरूको वर्णन छ, जसलाई केही आलिमहरूले एक किताबमा संकलित गरेका छन् । जस्तै अल-कबाएर लिज़्हबी, अल-ज़वाजिर अन इक़्तिराफ़ अल कबाएर लिल हैष्मी आदि । यहाँ यस नियमको वर्णन छ कि जो मुसलान महापाप (शिर्क, माता-पिताको अधिकारको अवहेलना, झूठो आदि) बाट रोकिइरहनेछ, त हामीले त्यसका तुच्छ पाप क्षमा गरिदिनेछौं । सूरः नज्ममा यस विषयको वर्णन छ, तर त्यहाँ महापापका साथ असभ्य (अनैतिक) कार्यबाट रोक्नेलाई पनि तुच्छ पापहरुको क्षमाको लागि आवश्यक भनिएको छ । परन्तु यसको अतिरिक्त तुच्छ पापहरूको पुनरावृत्ति उनलाई महापाप बनाईदिन्छ । यसैप्रकार महापापबाट रोकिनुका साथ-साथै इस्लाम धर्मको नियम तथा अनिवार्य कार्यहरूलाई निश्चित रूपले गर्नु र सत्कर्म गर्नु पनि अति आवश्यक छ । सहाबा कराम رضی اللہ عنہم ले इस्लाम धर्मको यस रूपलाई बुझेका थिए, यसकारण उनीहरूले केवल क्षमाको वचनमा मात्र भरोसा गरेनन्, बरु अल्लाह तआ़लाको कृपा प्राप्तिको लागि वर्णित सबै कुराको प्रयोजन गरे । जबकि हाम्रो

مُّدْخَلًا كَرِيمًا ﴿٣١﴾

तिम्रा तुच्छ पापहरूलाई हटाइदिनेछौं र मान-सम्मानको ढोकामा प्रवेश दिनेछौं ।

وَلَا تَتَمَنَّوْا مَا فَضَّلَ اللَّهُ بِهِ بَعْضَكُمْ عَلَىٰ بَعْضٍ ۚ لِّلرِّجَالِ نَصِيبٌ مِّمَّا اكْتَسَبُوا ۖ وَلِلنِّسَاءِ نَصِيبٌ مِّمَّا اكْتَسَبْنَ ۚ وَسْأَلُوا اللَّهَ مِن فَضْلِهِ ۗ إِنَّ اللَّهَ كَانَ بِكُلِّ شَيْءٍ عَلِيمًا ﴿٣٢﴾

(३२) र त्यस कुराको इच्छा नगर, जसको कारण अल्लाहले तिमीमध्ये कसैलाई कसैमाथि श्रेष्ठता प्रदान गरेको छ । पुरुषहरूको त्यो भाग हो जो उनीहरूले कमाए र स्त्रीहरूका लागि त्यो भाग हो, जुन उनीहरूले कमाए । र अल्लाह (तआला) बाट त्यसको कृपा माँग ।[1] अवश्य अल्लाह (तआला) प्रत्येक विषयको ज्ञाता छ ।

وَلِكُلٍّ جَعَلْنَا مَوَالِيَ مِمَّا تَرَكَ الْوَالِدَانِ

(३३) माता-पिता अथवा निकटका सम्बन्धि जे छाडेर मर्छन्, त्यसका उत्तराधिकारी हामीले

---

पल्लू त सत्कर्महरूबाट शून्य छ, परन्तु हाम्रा हृदय आशा तथा आकांक्षाहरूले परिपूर्ण छन् ।

[1]यसको अवतरणको विशेषतामा यो वर्णन गरिन्छ कि आदरणीय उम्मे सलमा رضی الله عنهم ले भन्नुभयो कि पुरुष धर्मयुद्धमा भाग लिन्छन् र शहीद हुन्छन् । हामी स्त्रीहरू यी श्रेष्ठ कर्महरूबाट बञ्चित छौं र हाम्रो उत्तराधिकार पनि आधा छ, यसपछि यो आयत उत्र्यो । (मुसनद अहमद भाग ६, पृष्ठ ३२२) अल्लाह तआलाको यस आदेशको यो अर्थ छ कि अल्लाह तआलाले पुरुषहरूलाई जुन शारीरिक शक्ति तथा स्फूर्ति आफ्नो बुद्धिमत्ता एवं इच्छाको कारण प्रदान गरेको छ र जसको आधारमा उनी धर्मयुद्धमा जान्छन्, अन्य बाहिरी कार्य पनि गर्दछन् । यो उनका निम्ति अल्लाहको विशेष उपहार हो, यसलाई देखेर स्त्रीहरूले पुरुषको योग्य गरिने कामहरुको इच्छा गर्नु हुँदैन । परन्तु अल्लाह तआलाका आदेशहरुको पालना तथा सत्कर्ममा बढी-चढी भाग लिनुपर्दछ । र यस क्षेत्रमा जे-जति उनी पुरुषहरू सरह कमाउने छन्, त्यसको पूरा-पूरा प्रतिफल दिइनेछ । यसको अतिरिक्त अल्लाह तआलासित उसको कृपाको प्रश्न गरुन् किनभने पुरुष-स्त्रीको बीचमा जुन प्राकृतिक तथा शक्तिको अन्तर छ, त्यो प्रकृतिको अटल नियम हो, जुन मात्र इच्छाले परिवर्तित हुन सक्दैन । तर उसको कृपाले लाभ तथा मेहनतद्वारा शेष रहने कमी पूरा गर्न सकिन्छ ।

وَالْأَقْرَبُونَ ۚ وَالَّذِينَ عَقَدَتْ أَيْمَانُكُمْ فَآتُوهُمْ نَصِيبَهُمْ ۚ إِنَّ اللَّهَ كَانَ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدًا ﴿٣٣﴾

प्रत्येक व्यक्तिका लागि निर्धारित गरिसकेका छौं ।[1] र जोसित तिमीले आफ्नो हातले सन्धि गरेका छौ, उनीहरूलाई उनको भाग देउ,[2] वास्तवमा अल्लाह तआला प्रत्येक कुरोलाई देखिराखेको छ ।

[1] موالی बहुवचन हो مولى । र مولى का कैयन् अर्थ छन् मित्र, मुक्त गरिएको दास, काकाको भाई, छिमेकी । परन्तु यहाँ यसको तात्पर्य उत्तराधिकारी हुन् । अर्थ यो हो कि प्रत्येक पुरुष-स्त्री जे-जति छाडेर मर्नेछन्, त्यसका उत्तराधिकारी माता-पिता तथा अन्य निकटवर्ती सम्बन्धी हुनेछन् ।

[2] यो आयत प्रचलित हुने अथवा निरस्त हुने कुरोमा व्याख्याकारहरूको मतभेद छ । इब्ने जरीर तबरी आदि यसलाई निरस्त होइन (आदेशित) मान्दछन् तथा أيمانكم (सन्धि) बाट तात्पर्य त्यो प्रतिज्ञा तथा सन्धि मान्दछन् जुन एक-अर्काको सहायताको लागि इस्लामभन्दा पूर्व दुई व्यक्तिहरू अथवा दुई क़बीलाहरूको बीचमा र इस्लामको पश्चात पनि चलिआइराखेको थियो । (نصيبهم) (भाग) सित तात्पर्य त्यसै प्रतिज्ञा तथा सन्धिको पालना गरे अनुसार सहायता तथा सहयोगको भाग हो । तथा इब्ने क़सीर एवं अन्य व्याख्याकारहरूको निकट यो आयत निरस्त छ । किनभने (أيمانكم) उनका निकट त्यो सन्धि हो जुन हिज़रत पछि एक अन्सारी मुहाजिरको बीचमा भाईचाराको रूपमा भएको थियो । यसमा एक मोहाजिर, अन्सारीको मालको त्यसका सम्बन्धीहरूको साटो उत्तराधिकारी हुने गर्थ्यो । परन्तु यो एउटा अस्थाई व्यवस्था थियो, यसकारण पछि

﴿وَأُولُوا الْأَرْحَامِ بَعْضُهُمْ أَوْلَىٰ بِبَعْضٍ فِي كِتَابِ اللَّهِ إِنَّ اللَّهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ﴾

"सम्बन्धी अल्लाहको आदेशानुसार एक-अर्काको अधिक अधिकारी छन् ।" (अल-अन्फ़ाल-७५)

लाई उतारेर यसलाई निरस्त गरिदियो । अब فآتوهم نصيبهم को तात्पर्य मित्रता, प्रेम तथा एक-अर्काको सहायता छ । र वसीयत अनुसार केही दिइदिनु पनि सम्मिलित छ । सन्धिको अनुसार, प्रतिज्ञाको अनुसार अथवा भाइचाराको अनुसार अब उत्तराधिकारको विचार हुँदैन । ज्ञानीहरूको एक समूहले यसबाट यस्ता दुई व्यक्तिलाई लिए, जसमा कमसेकम एक व्यक्ति निरुत्तराधिकारी छ र एक अर्कासित यो तय गर्छ कि म तिम्रो उत्तराधिकारी हूँ । यदि कुनै ठूलो अपराध गर्दछु भने मेरो सहायता गर्नु र यदि म मरिहाल्छु भने त मेरो देयत (खूनको बदलामा धन) लिइहाल्नू । यस निरुत्तराधिकारीको मृत्यु पश्चात त्यसको मालको त्यो उपरोक्त व्यक्ति उत्तराधिकारी नहोस् । केही अन्य ज्ञानी यस आयतको एउटा अन्य अर्थ वर्णित गर्दछन् । उनी भन्दछन् والذين عقدت أيمانكم सित तात्पर्य पति-पत्नी हुन् । यसका

ٱلرِّجَالُ قَوَّٰمُونَ عَلَى ٱلنِّسَآءِ بِمَا فَضَّلَ ٱللَّهُ بَعْضَهُمْ عَلَىٰ بَعْضٍ وَبِمَآ أَنفَقُوا۟ مِنْ أَمْوَٰلِهِمْ ۚ فَٱلصَّٰلِحَٰتُ قَٰنِتَٰتٌ حَٰفِظَٰتٌ لِّلْغَيْبِ بِمَا حَفِظَ ٱللَّهُ ۚ وَٱلَّٰتِى تَخَافُونَ نُشُوزَهُنَّ فَعِظُوهُنَّ وَٱهْجُرُوهُنَّ فِى ٱلْمَضَاجِعِ وَٱضْرِبُوهُنَّ ۖ فَإِنْ أَطَعْنَكُمْ فَلَا تَبْغُوا۟ عَلَيْهِنَّ سَبِيلًا ۗ إِنَّ ٱللَّهَ كَانَ عَلِيًّا كَبِيرًا ﴿٣٤﴾

(३४) पुरुषहरू स्त्रीहरूमाथि अधिपति (संरक्षक) हुन् । यसकारण कि अल्लाहले एकलाई अर्कोमाथि श्रेष्ठता प्रदान गरेको छ तथा यसकारण कि पुरुषहरूले आफ्नो धन खर्च गरेका छन्,[1] अतः सुशील आज्ञाकारी स्त्रीहरू पतिको अनुपस्थितिमा अल्लाहको रक्षाद्वारा (मर्यादा एवं धन) का रक्षक नारीहरू हुन् र जुन स्त्रीहरूबाट तिमीलाई दुराचारको भय छ, तिनीहरूलाई सचेत गर तथा तिनको ओछ्यान् अलग गरिदेउ (तैपनि मान्दैनन्) भने कुट्नु अति आवश्यक भए र यदि तिम्रो भनाई मान्दछन् भने तिनका विरुद्ध कुनै मार्ग नखोज ।[2] निश्चय अल्लाह परम महान छ ।

सम्बन्ध الأقربون सित छ। अर्थ यो हो कि "माता-पिताले, निकटवर्ती सम्बन्धिले र जसको तिमीसित आपसमा सन्धि भइसकेछ (अर्थात् पति अथवा पत्नी) तिनीहरूले जे-जति छाडे, त्यसको उत्तराधिकारी अर्थात् भागीदार हामीले निर्धारित गरिदिएका छौं। अतः ती उत्तराधिकारीहरूलाई तिनको अधिकार दिइहाल।" अर्थात् पछिल्ला आयतहरुमा उत्तराधिकारीहरूको भागको सम्बन्धमा जुन विस्तारपूर्वक वर्णन गरिएको छ त्यसलाई यहाँ संक्षेपमा तिर्ने कुरोमा जोड दिएको छ।

[1]यसमा पुरुषको अधिपत्य तथा श्रेष्ठताका दुईटा कारण भनिएका छन् । एक ईश्वरीय छ जुन उसको शारीरिक शक्ति तथा तीव्र बुद्धि छ, जसमा पुरुष स्त्रीभन्दा निश्चित रूपले श्रेष्ठ छ । दोस्रो कारण अर्जित छ, जसलाई प्राप्त गर्ने अधिकार इस्लाम धर्मले पुरुषलाई दिएको छ र स्त्रीलाई त्यसको प्राकृतिक कमजोरी तथा विशेष शिक्षाको कारण जुन इस्लामले स्त्रीलाई चारित्रिक सामर्थ्य र त्यसको पवित्रताको रक्षाको लागि आवश्यक बताएको छ। स्त्रीलाई आर्थिक उल्झनहरूबाट टाढा राखेको छ। स्त्रीको नेतृत्वको विरुद्ध कुर्आन करीमको यो अत्यन्त स्पष्ट दृढ तर्क छ, जसको अत्यन्त दृढता बुखारीको त्यस हदीसबाट हुन्छ कि "त्यो समुदाय कहिल्यै सफल हुन सक्दैन, जसको नेतृत्व एउटा महिलाले गरिराखेको हुन्छ।" (सहीह बुखारी किताबुल मग़ाजी, वाब कितावुन्नवी इला किसरा व कैसर, किताबुल फ़ेतन, बाब १८)

[2]अवज्ञाकारिताको स्थितिमा सर्वप्रथम स्त्रीलाई सम्झाउनु-बुझाउनु हो, अनि अस्थाई रूपले अलग भईहाल्नु हो, जुन एउटा बुद्धिमान स्त्रीको लागि निकै ठूलो चेतावनी हो । जब यसबाट पनि मान्दैन् भने सामान्य रुपले पिट्ने आज्ञा छ,

وَاِنْ خِفْتُمْ شِقَاقَ بَيْنِهِمَا فَابْعَثُوْا حَكَمًا مِّنْ اَهْلِهٖ وَحَكَمًا مِّنْ اَهْلِهَا ۚ اِنْ يُّرِيْدَآ اِصْلَاحًا يُّوَفِّقِ اللّٰهُ بَيْنَهُمَا ؕ اِنَّ اللّٰهَ كَانَ عَلِيْمًا خَبِيْرًا ۝

(३५) यदि तिमीलाई (पति-पत्नीको) बीच बिगाड हुने कुराको भय छ भने एक निर्णय गर्ने पतिको परिवारबाट र एक निर्णायक पत्नीको परिवारबाट नियुक्त गर,[1] यदि यी दुबै परस्पर सन्धि गर्न चाहन्छन् भने अल्लाह ती दुबैको मेलमिलाप गराईदिनेछ, निश्चय अल्लाह ज्ञाता सूचित छ।

وَاعْبُدُوا اللّٰهَ وَلَا تُشْرِكُوْا بِهٖ شَيْـًٔا وَّبِالْوَالِدَيْنِ اِحْسَانًا وَّبِذِي الْقُرْبٰى وَالْيَتٰمٰى وَالْمَسٰكِيْنِ وَالْجَارِ ذِي الْقُرْبٰى وَالْجَارِ الْجُنُبِ

(३६) तथा अल्लाहको आराधना गर, त्यससँग कसैलाई मिश्रण नगर, तथा माता-पिता एवं सम्बन्धीहरू, अनाथ, निर्धनहरूलाई तथा नजिकका छिमेकी तथा टाढाका छिमेकी[2] तथा

तर यो कुटाई पशुतहपूर्ण वा अत्याचारी हुनुहुँदैन, जस्तो कि अशिक्षितहरूको बानी हुन्छ। अल्लाह र त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लमले यस अत्याचारको आज्ञा कुनै पुरुषलाई दिनुभएको छैन। यदि उनी सुधार गरिहाल्छन् भने मार्ग नखोज अर्थात् कुटपीट नगर, दुख नदेउ, तलाक नदेउ अर्थात् तलाक अन्तिम सीमा हो जब अन्य कुनै मार्ग रहँदैन। परन्तु पुरुष यस अधिकारलाई पनि अधिक अनुचित रूपले प्रयोग गर्दछन् र स-साना कुरोमा तुरुन्त तलाक दिइहाल्छन् र साथै आफ्नो जीवन नष्ट गरिहाल्छन् र त्यसको साथ-साथै यदि बच्चा छन् भने तिनीहरूको जीवन पनि नष्ट गरिदिन्छन्।

[1]घरभित्र उपरोक्त तीनवटै प्रयत्न विफल हुन्छन् भने चौथो उपाय दुई मध्यस्त छन्। यदि सद्भावक छन् भने निश्चय उनको सुधार्ने कोशिश सफल हुनेछ अनि विफलताको अवस्थामा मध्यस्थहरूलाई पति-पत्नीमा विभाजन अर्थात् तलाक (विवाह विच्छेद) को अधिकार छ अथवा छैन ? यसमा विद्वानहरूमा मतभेद छ। केहीले यसलाई अस्थाई न्यायधीसको निर्णय अथवा पति-पत्नीको विभाजनको अधिकार दिनबाट प्रबन्धित गर्दछन्, परन्तु साधारण ज्ञानीहरूले यसलाई बिना त्यस अधिकार मान्दछन्। (विस्तृत जानकारीको लागि तफ़सीर तबरी, फ़तहुल कदीर, तफ़सीर इब्ने कसीर हेर्नुस्)

[2]الجار الجنب सम्बन्धी छिमेकीको तुलनामा भएको छ, जसको अर्थ यस्तो छिमेकी छ, जो सम्बन्धी नहोस् अर्थात यो कि छिमेकीसित छिमेकीको रूपमा प्रेम व्यवहार गरियोस्, त्यो सम्बन्धी होस् या नहोस्। जुन प्रकारले हदीसमा पनि यस कुरोमा बडो जोड दिएर वर्णन गरिएको छ।

وَالصَّاحِبِ بِالْجَنْۢبِ وَابْنِ السَّبِيْلِ ۙ وَمَا مَلَكَتْ اَيْمَانُكُمْ ؕ اِنَّ اللّٰهَ لَا يُحِبُّ مَنْ كَانَ مُخْتَالًا فَخُوْرَا ۙ﴿٣٦﴾

साथको यात्री[1] सँग उपकार गर तथा यात्री र जो तिम्रो अधीन छन्[2] (उनीसित), नि:सन्देह अल्लाह अंहकारी, अभिमानीसित प्रेम गर्दैन ।[3]

الَّذِيْنَ يَبْخَلُوْنَ وَيَاْمُرُوْنَ النَّاسَ بِالْبُخْلِ وَيَكْتُمُوْنَ مَا اٰتٰىهُمُ اللّٰهُ مِنْ فَضْلِهٖ ؕ وَاَعْتَدْنَا لِلْكٰفِرِيْنَ عَذَابًا مُّهِيْنًا ۚ﴿٣٧﴾

(३७) जुन मानिसहरू (स्वयं) कंजूसीपन गर्दछन् र अरुहरूलाई पनि कंजूसीपन गर्न भन्दछन् र अल्लाह तआलाले जुन आफ्नो कृपाले उनीहरूलाई प्रदान गरेको छ, त्यसलाई लुकाउँछन्, हामीले ती कृतघ्नहरूका लागि अपमानजनक यातना तयार गरेका छौं ।

وَالَّذِيْنَ يُنْفِقُوْنَ اَمْوَالَهُمْ رِئَآءَ النَّاسِ وَلَا يُؤْمِنُوْنَ بِاللّٰهِ وَلَا بِالْيَوْمِ الْاٰخِرِ ؕ وَمَنْ يَّكُنِ

(३८) र जुन मानिसहरू आफ्ना माल मानिसहरूलाई देखाउनको निम्ति व्यय गर्दछन् र अल्लाह (तआला) मा तथा केयामतको दिनमा

[1]यसबाट तात्पर्य यो हो यात्राको साथी, साझेदार, पत्नी तथा त्यो व्यक्ति जो लाभको आशामा कसैको निकटता तथा साथ गर्दछ । बरु यसको परिभाषामा ती मानिसहरू पनि आउन सक्दछन्, जसलाई शिक्षा प्राप्त गर्नको निम्ति अथवा प्रशिक्षण प्राप्त गर्नको लागि अथवा कुनै व्यापारिक उद्देश्यले तपाईंको निकट बस्ने अवसर प्राप्त होस् । (फ़तहुल कदीर)

[2]यसमा घर, दूकान, उद्योग, मिलहरुका कर्मचारी पनि आउँछन् । दासीहरूसँग सद्व्यवहारमाथि हदीसहरूमा बडो जोड दिइएको छ ।

[3]घमण्ड, गर्व तथा अभिमान अल्लाह तआलालाई कदापि प्रिय छैन । बरु एक हदीसमा यहाँसम्म भनिएको छ, "त्यो व्यक्ति स्वर्गमा जाने छैन जसको हृदयमा रायोको एक दाना समान पनि घमण्ड हुनेछ ।" (सहीह मुस्लिम, किताबुल ईमान, वाव तहरीमिल, किब्रे व बयानिहि हदीस संख्या ९१) यस ठाउँमा घमण्डको विशेषरुपले आलोचना गर्नुबाट यो उद्देश्य छ कि अल्लाह तआलाको आराधना र जुन-जुन व्यक्तिहरूसित सद्व्यवहार गर्नमा जोड दिइएको छ, यसको अनुसार कर्म त्यसैले गर्नसक्छ, जसको हृदयमा घमण्ड छैन, घमण्डबाट शून्य छ । अभिमानी र अहंकारी व्यक्ति सही अर्थहरुमा न त इबादत उचित रूपले गर्न सक्दछ र न आफन्ती र अन्यसँग सद्व्यवहार नै गर्न सक्दछ ।

الشَّيْطٰنُ لَهٗ قَرِيْنًا فَسَآءَ قَرِيْنًا ﴿٣٨﴾

विश्वास गर्दैनन्, र जसको संगी-साथी शैतान छ,[1] त्यो साह्रै नराम्रो साथी हो ।

وَمَا ذَا عَلَيْهِمْ لَوْ اٰمَنُوْا بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ وَاَنْفَقُوْا مِمَّا رَزَقَهُمُ اللّٰهُ ۭ وَكَانَ اللّٰهُ بِهِمْ عَلِيْمًا ﴿٣٩﴾

(३९) र उनीहरूको के हानि हुन्थ्यो यदि उनीहरू अल्लाह (तआला) मा प्रलय (केयामत) को दिनमा विश्वास गरेको भए र अल्लाह (तआ़ला) ले जे उनीहरूलाई प्रदान गरेको छ, त्यसबाट खर्च गरेको भए, अल्लाह (तआ़ला) उनीहरूलाई राम्ररी जान्दछ ।

اِنَّ اللّٰهَ لَا يَظْلِمُ مِثْقَالَ ذَرَّةٍ ۚ وَاِنْ تَكُ حَسَنَةً يُّضٰعِفْهَا وَيُؤْتِ مِنْ لَّدُنْهُ اَجْرًا عَظِيْمًا ﴿٤٠﴾

(४०) नि:सन्देह, अल्लाह (तआ़ला) एक कण बराबर पनि अत्याचार गर्दैन र यदि पुण्य छ भने त्यसलाई दुईगुना गरिदिन्छ एवं विशेषरूपले आफ्नो तर्फबाट निकै ठूलो प्रत्युपकार प्रदान गर्दछ ।

فَكَيْفَ اِذَا جِئْنَا مِنْ كُلِّ اُمَّةٍۭ بِشَهِيْدٍ وَّجِئْنَا بِكَ عَلٰي هٰٓؤُلَاۗءِ شَهِيْدًا ﴿٤١﴾

(४१) तं के हाल हुनेछ जुनबेला प्रत्येक समुदाय (उम्मत) मध्येबाट एक साक्षी हामीले ल्याउनेछौं र तपाईंलाई उनीहरूमाथि साक्षी बनाएर ल्याउनेछौं ।[2]



[1]कन्जूसी (अर्थात् अल्लाहको मार्गमा व्यय नगर्नु) अथवा व्यय त गर्नु तर प्रदर्शन एवं देखावटीको लागि गर्नु । यी दुबै कुरा अल्लाहलाई अति अप्रिय छन् । र तिनको निन्दाको निम्ति यो कुरा नै काफी छ कि यहाँ कुरआन करीममा यी दुबै कुरालाई काफ़िरहरूको आचरण भनिएको छ जो अल्लाह र अन्त दिवसप्रति विश्वास गर्दैनन् र शैतान उनको साथी हो ।

[2]प्रत्येक समुदाय (उम्मत) को पैग़म्बर (सन्देष्टा) अल्लाहको सदनमा गवाही वस्नेछ, "हे अल्लाह ! हामीले त तिम्रो सन्देश आ-आफ्ना कौमसम्म पुऱ्याइदिएका थियौं । अब उनीहरूले मानेनन् भने यसमा हाम्रो के अपराध छ ?" फेरि उनीहरूको बारेमा नबी करीम (सल्लल्लाहु अलैहि वसल्लम) गवाही दिनेछन् "हे अल्लाह ! यिनीहरू सत्य भन्दछन् ।" तपाईं सल्लल्लाहु अलैहि वसल्लम यो गवाही (साक्ष्य) त्यस कुरआनको कारण दिनुहुनेछ जुन उहाँमाथि अवतरित भयो र जसमा पूर्वका नबीहरू र उनका कौमका घटनाहरु आवश्यकता अनुसार वर्णित छन् । यो एउटा कठिन अवस्था हुनेछ, यसको विचारले नै शरीरमा कम्पन

يَوْمَئِذٍ يَوَدُّ الَّذِينَ كَفَرُوا وَعَصَوُا الرَّسُولَ لَوْ تُسَوَّىٰ بِهِمُ الْأَرْضُ وَلَا يَكْتُمُونَ اللَّهَ حَدِيثًا ﴿٤٢﴾

(४२) जुन दिन काफ़िर (अस्वीकार गर्ने) र रसूलका अवज्ञाकारीहरू यो कामना गर्नेछन् कि उनीहरूलाई धर्तीसँग समतल गरिदिए हुन्थ्यो र अल्लाह (तआ़ला) सित कुनै कुरा लुकाउन सक्ने छैनन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَقْرَبُوا

(४३) हे निष्ठावानहरू ! यदि तिमी नशामा टिल्ल छौ भने नमाज़को निकट नजाउ,[1] जबसम्म कि

---

उत्पन्न गरिदिन्छ। हदीसमा छ कि एकपटक नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय अब्दुल्लाह इब्ने मसऊद सित कुर्आन सुन्ने इच्छा व्यक्त गर्नुभयो, उनी सुनाउँदै जब यस आयतमा पुगे त उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) ले भन्नुभयो, "वस अब काफी छ ।" आदरणीय इब्ने मसऊद भन्नुहुन्छ, "मैले देखें कि उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) का आँखाहरुबाट अश्रु प्रभावित थिए ।" (सहीह बुख़ारी फज़ाएले कुर्आन) केही भन्छन् कि साक्ष्य त्यतिखेर मात्र दिन सकिन्छ, जब सबैकुरा साक्षीले आफ्नो आँखाले देखेको हुन्छ । यसकारण उनी शहीदको अर्थ "सर्वव्यापी" सिद्ध गर्दछन् र यसप्रकार नबी करीम (सल्लल्लाहु अलैहि वसल्लम) लाई प्रत्येक स्थानमा विद्यमान सिद्ध गर्दछन्, तर नबी करीम (सल्लल्लाहु अलैहि वसल्लम) लाई प्रत्येक स्थानमा उपस्थित ठान्नु उहाँ सल्लल्लाहु अलैहि वसल्लम लाई अल्लाहका गुणहरुमा सम्मिलित गर्नु हो, जुन शिर्क हो । किनभने प्रत्येक स्थानमा अल्लाह (तआ़ला) लाई आफ्नो ज्ञानद्वारा उपस्थित हुने गुण छ। "शहीद" शब्दबाट यो भाव निकाल्नु आफुमा कुनै शक्ति राख्दैन, यसकारण कि साक्ष्य निश्चित ज्ञानकै आधारमा पनि हुन्छ र कुर्आन करीममा वर्णित घटनाहरुभन्दा अधिक निश्चित ज्ञान कसको हुनसक्छ ? यसै निश्चित ज्ञानको आधारमा स्वयं मुसलमानहरूलाई पनि شهداء على الناس (सृष्टिमा मानिसहरूको साक्ष्य) भनिएको छ। यदि साक्ष्यको निम्ति उपस्थिति आवश्यक छ भने प्रत्येक मुसलमान व्यक्तिलाई सर्वव्यापी मान्नु पर्नेछ । अन्ततः नबी सल्लल्लाहु अलैहि वसल्लमको विषयमा यो विश्वास मिश्रणवाद एवं निराधार हो ।

[1]यो आदेश त्यस वेला दिइएको थियो, जबसम्म मदिरा निषेध गरिएको थिएन । अतः एक भोजमा मदिरापानको पश्चात जब नमाज़को लागि उभिए, त नशामा कुर्आनको शब्द पनि इमाम साहब गलत पढ्नथाले । (विस्तारको लागि हेर्नुस् तिर्मिजी, तफसीर सूरः अल-निसा) जसमा यो आयत उत्र्यो कि नसाको अवस्थामा नमाज़ नपढ्ने गर । अर्थात् त्यसबेलासम्म नमाज़को समयमा मदिरापान निषेध गरिएको थियो पूर्ण-निषेधाज्ञा र वर्जित हुने आदेशपछि अवतरित भयो ।

الصَّلٰوةَ وَاَنْتُمْ سُكٰرٰى حَتّٰى تَعْلَمُوْا مَا تَقُوْلُوْنَ وَلَا جُنُبًا اِلَّا عَابِرِىْ سَبِيْلٍ حَتّٰى تَغْتَسِلُوْا ؕ وَاِنْ كُنْتُمْ مَّرْضٰٓى اَوْ عَلٰى سَفَرٍ اَوْ جَآءَ اَحَدٌ مِّنْكُمْ مِّنَ الْغَآئِطِ اَوْ لٰمَسْتُمُ النِّسَآءَ فَلَمْ تَجِدُوْا مَآءً فَتَيَمَّمُوْا صَعِيْدًا طَيِّبًا فَامْسَحُوْا بِوُجُوْهِكُمْ وَاَيْدِيْكُمْ ؕ

आफ्नो कुरा बुझ्न थाल्दैनौ, र जनाबत (अशुद्धि) को अवस्थामा जबसम्म स्नान गर्दैनौ[1] हो, यदि बाटोमा हिंडिराखेका छौ भने अर्कै कुरा हो ।[2] र यदि तिमी रोगी छौ, अथवा यात्रामा छौ अथवा तिमीमध्येबाट कोही शौचालयबाट आएको छ अथवा तिमीले स्त्रीहरूसँग संभोग गरेका छौ र तिमीलाई पानी उपलब्ध छैन त पवित्र माटोबाट काम चलाउ र त्यसमा हात लगाएर आफ्नो मुख र हातहरुमा दल ।[3] निःसन्देह अल्लाह

[1]अर्थात अपवित्रताको अवस्थामा पनि नमाज़को लागि पवित्रता आवश्यक छ ।

[2]यसको अर्थ यो होइन कि यदि पानी उपलब्ध छैन भने अपवित्रताको अवस्थामा नै नमाज़ पढ (जस्तो कि केहीले भनेका छन्) बरु धेरै आलिमहरूको मत छ कि अपवित्रताको अवस्थामा तिमी मस्जिदमा नबस, परन्तु यदि मस्जिद भित्रबाटै जानुपरेको छ भने जान सक्छौ । केही सहाबाका घर यस्ता थिए कि उनलाई हर परिस्थितिमा मस्जिद-ए-नबवी भित्रबाट जानु पर्दथ्यो, यो छुट उनीहरूकै कारण प्रदान गरियो । (इब्ने कसीर) अन्यथा यात्रीको आदेश अगाडी आउँदैछ ।

[3](१) रोगीबाट तात्पर्य त्यो रोगी हो जसलाई पानीको प्रयोगबाट हानि अथवा रोगमा बृद्धि हुने कुराको भय छ । (२) सामान्य यात्री, लामो यात्रा छ अथवा छोटो, यदि पानी उपलब्ध छैन भने तयमुम्म गर्ने आज्ञा छ । पानी उपलब्ध नभएको स्थितिमा यो आज्ञा निवासीलाई पनि छ, तर रोगी तथा यात्रीलाई यसप्रकारको आवश्यकता सामान्यतः आइपर्ने कारणले विशेषरुपले उनको लागि आज्ञाको वर्णन गरिदिएको छ । (३) शौचबाट आउनेवाला (४) तथा पत्नीसित संभोग गर्नेवाला, उनलाई पनि पानी उपलब्ध नभएको स्थितिमा तयम्मुम गरी नमाज पढ्ने आज्ञा छ ।

**तयम्मुमको विधि :** यो हो कि एकै पटक हात पवित्र माटोमा छोएर नाडीसम्म दुवै हात एक-अर्कामाथि मलून् (कूइनोसम्म आवश्यक छैन) र अनुहारमा पनि दलून् । "قال في التيمم "ضربة للوجه والكفين (मुसनद अहमद, भाग ४ पृष्ठ २६३) अम्मार رضى الله عنه ले भन्नुभयो, "नबी सल्लल्लाहु अलैहि वसल्लमले तयम्मुमको विषयमा भन्नुभयो कि यी दुवै हातहरू तथा अनुहारको लागि एकै पटक छ ﴿صَعِيْدًا طَيِّبًا﴾ सित तात्पर्य पवित्र माटो हो । धर्तीबाट निस्कने प्रत्येक कुरो होइन जस्तो कि केहीको विचार छ । हदीसमा विशेषरुपले स्पष्ट गरिदिएको छ ।

«جُعِلَتْ تُرْبَتُهَا لَنَا طَهُوْرًا إِذَا لَمْ نَجِدِ الْمَآءَ»

إِنَّ اللَّهَ كَانَ عَفُوًّا غَفُورًا

(तआ़ला) अति क्षमाशील (माफ गर्ने) दयालु छ ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ أُوتُوا نَصِيبًا مِّنَ الْكِتَابِ يَشْتَرُونَ الضَّلَالَةَ وَيُرِيدُونَ أَن تَضِلُّوا السَّبِيلَ

(४४) के तिमीले उनीहरूलाई देखेनौ जसलाई किताबको केही भाग दिइयो ? उनीहरू पथ-भ्रष्टता किन्दछन् र चाहन्छन् कि तिमी पनि मार्ग-विचलित होउ ।

وَاللَّهُ أَعْلَمُ بِأَعْدَائِكُمْ ۚ وَكَفَىٰ بِاللَّهِ وَلِيًّا وَكَفَىٰ بِاللَّهِ نَصِيرًا

(४५) र अल्लाह (तआ़ला) तिम्रा शत्रुहरूलाई राम्रो प्रकारले जान्दछ र अल्लाह (तआ़ला) को मित्र हुनु नै पर्याप्त छ तथा अल्लाह (तआ़ला) सहायकको रूपमा पर्याप्त छ ।

مِّنَ الَّذِينَ هَادُوا يُحَرِّفُونَ الْكَلِمَ عَن مَّوَاضِعِهِ وَيَقُولُونَ سَمِعْنَا وَعَصَيْنَا وَاسْمَعْ غَيْرَ مُسْمَعٍ وَرَاعِنَا لَيًّا بِأَلْسِنَتِهِمْ وَطَعْنًا فِي الدِّينِ ۚ وَلَوْ أَنَّهُمْ قَالُوا سَمِعْنَا وَأَطَعْنَا وَاسْمَعْ وَانظُرْنَا لَكَانَ خَيْرًا لَّهُمْ

(४६) केही यहूदी कथनहरुलाई तिनका उचित ठाउँबाट फेर-बदल गरिदिन्छन् र भन्दछन् कि हामीले सुन्यौं र अवज्ञा गर्‍यौं र सुन, जबकि तिमी सुन्ने योग्य छैनौ[1] र हाम्रो अधीनता स्वीकार गर (तर यो भन्नुमा) आफ्नो जिभ्रो बटार्छन् र धर्मलाई कलंकित गर्दछन्, र यदि यिनीहरू भन्दछन् कि हामीले सुन्यौं र हामीले मान्यौं र तपाईं सुन्नुस र हामीलाई हेर्नुस् त यो उनको

"जब हामीलाई पानी प्राप्त हुँदैन त धर्तीको माटोलाई हाम्रो निम्ति पवित्र बनाइयो ।" (सहीह मुस्लिम किताबुल मसाजिद)

[1]यहूदीहरूका दुराचरण तथा कुकर्महरू मध्येबाट यो पनि एउटा थियो कि "हामीले सुन्यौं का साथ भन्थ्यौं परन्तु हामी पालन गर्ने छैनौं" "अर्थात् अनुसरण गर्ने छैनौं ।" उनी हृदयमा भन्दथे अथवा आफ्ना साथीहरूसित भन्दथे अथवा निर्भयताको प्रदर्शन गरी मुखकै अगाडी भन्थे । यसैप्रकार غير مسمع (तिम्रो कुरा नसुनियोस्) यो शापको रूपमा भन्दथे अर्थात् तिम्रो कुरा स्वीकार नहोस् । راعنا को विषयमा सूर: बक़र: आयत १०४ को व्याख्यामा वर्णन भइसकेको छ ।

وَاَقْوَمَ ۙ وَلٰكِنْ لَّعَنَهُمُ اللّٰهُ بِكُفْرِهِمْ فَلَا يُؤْمِنُوْنَ اِلَّا قَلِيْلًا ﴿٤٦﴾

लागि अति श्रेष्ठ थियो र अत्याधिक उचित थियो, तर अल्लाह (तआला) ले उनीहरूका कुफ्रका कारणले उनीहरूलाई धिक्कृत गरेको छ, अनि यिनी बहुत कम ईमान स्थापित गर्दछन् (विश्वास गर्दछन्) ।[१]

يٰٓاَيُّهَا الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ اٰمِنُوْا بِمَا نَزَّلْنَا مُصَدِّقًا لِّمَا مَعَكُمْ مِّنْ قَبْلِ اَنْ نَّطْمِسَ وُجُوْهًا فَنَرُدَّهَا عَلٰٓى اَدْبَارِهَآ اَوْ نَلْعَنَهُمْ كَمَا لَعَنَّآ اَصْحٰبَ السَّبْتِ ؕ وَكَانَ اَمْرُ اللّٰهِ مَفْعُوْلًا ﴿٤٧﴾

(४७) हे अहले किताब ! जे-जति हामीले उतारेका छौं, जुन त्यसको प्रमाणकारी छ जुन तिम्रो पासमा छ, यसमा विश्वास गर यसभन्दा पूर्व कि हामी अनुहारहरूका रुपरेखा बिगारिदिन्छौं ।[२] अथवा तिनीहरूमाथि धिक्कार पठाउँछौं जस्तो कि हामीले शनिवारवाला दिनका मानिसहरूमाथि धिक्कार गरेका छौं ।[३] र अल्लाह (तआला) को निर्णय त अवश्य पूरा भएर नै रहन्छ ।[४]

اِنَّ اللّٰهَ لَا يَغْفِرُ اَنْ يُّشْرَكَ بِهٖ وَيَغْفِرُ مَا دُوْنَ ذٰلِكَ لِمَنْ يَّشَآءُ ۚ

(४८) अवश्य अल्लाह (तआला) आफ्नो साथमा मिश्रण गरिने कुरोलाई क्षमा गर्दैन र यसका अतिरिक्त जसलाई चाहन्छ क्षमा गरिदिन्छ ।[५]



[१]अर्थात् विश्वास गर्नेवाला बहुत थोरै छन्, जस्तो कि पहिले वर्णन भइसकेको छ कि यहूदीहरू मध्येबाट ईमान ल्याउनेहरूको संख्या दससम्म पनि पुगेन अथवा यो अर्थ छ कि बहुत कम कुरामा विश्वास गर्दछन्, जबकि लाभकारी ईमान यो हो कि सबै कुराहरूमा विश्वास गरियोस् ।

[२]अर्थात् यदि अल्लाह तआला चाहन्छ भने तिमीलाई तिम्रा कुकर्महरुको प्रतिफल स्वरुप दण्ड दिन सक्छ ।

[३]यो घटना सूरः अल-आराफमा आउनेछ, केही संकेत पहिला पनि गुज्रिसकेको छ । अर्थात् तिमी पनि उनीहरूकै समान तिरस्कृत हुनसक्छौ ।

[४]अर्थात् जब त्यो कुनै कुराको आदेश गर्दछ तब न कोही त्यसको विरोध गर्न सक्दछ न त्यसलाई रोक्न सक्दछ ।

[५]अर्थात् यस्ता पाप जसको लागि ईमानवाला क्षमा नमागी मर्दछन्, अल्लाह तआला यदि कसैलाई चाहन्छ भने विना दण्ड दिई क्षमा गरिदिनेछ, धेरै मानिसहरूलाई दण्ड दिए पश्चात र धेरैजसोलाई नबी सल्लल्लाहु अलैहि वसल्लमको शिफ़ाअत (सिफ़ारिश) मा क्षमा गरिदिनेछ,

وَمَنْ يُّشْرِكْ بِاللّٰهِ فَقَدِ افْتَرٰٓى اِثْمًا عَظِيْمًا ﴿٤٨﴾

र जसले अल्लाह (तआला) को साथमा मिश्रण गऱ्यो, त्यसले अल्लाहमाथि ठूलो आरोप लगायो (रच्यो) ।[1]

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ يُزَكُّوْنَ اَنْفُسَهُمْ ۭ بَلِ اللّٰهُ يُزَكِّيْ مَنْ يَّشَاۗءُ وَلَا يُظْلَمُوْنَ فَتِيْلًا ﴿٤٩﴾

(४९) के तपाईंले तिनीहरूलाई देख्नु भएन जो आफ्नो पवित्रता (र प्रशंसा) स्वयं गर्दछन् ? बरु अल्लाह (तआला) जसलाई चाहन्छ पवित्र गर्दछ, तथा उनी एउटा धागो बराबर पनि अत्याचारमा पर्ने छैनन् ।[2]

اُنْظُرْ كَيْفَ يَفْتَرُوْنَ عَلَي اللّٰهِ الْكَذِبَ ۭ وَكَفٰى بِهٖٓ اِثْمًا مُّبِيْنًا ﴿٥٠﴾

(५०) हेर यिनीहरू अल्लाह (तआला) माथि कुन प्रकार मिथ्यारोपण गर्दछन्[3] तथा यो घोर पापको लागि धेरै छ ।[4]

तर शिर्क कुनै पनि परिस्थितिमा क्षमा हुनेछैन किनभने मुश्रिकको लागि अल्लाह तआलाले स्वर्ग हराम (निषेध) गरिदिएको छ ।

[1]अर्को ठाउँमा आदेश छ ﴿إِنَّ الشِّرْكَ لَظُلْمٌ عَظِيمٌ﴾ (लुकमान) "शिर्क बहुत ठूलो अत्याचार हो ।" हदीसमा यसलाई महापाप भनिएको छ "أكبر الكبائر الشرك بالله" ।

[2]यहूदी आफूले आफैंलाई ठूलो ठान्दछन् । जस्तै "हामी अल्लाहका छोरा तथा त्यसका प्रिय पात्र हौं" आदि । अल्लाह तआलाले आदेश गऱ्यो, "पवित्रताको अधिकार पनि अल्लाहलाई छ र त्यसको ज्ञान पनि उसैलाई छ ।" "फ़तील" खजूरको बियाँको कटावमा जुन धागो अथवा सूतको समान निस्किराखेको देखिन्छ, त्यसलाई भनिन्छ । अर्थात् यति थोरै पनि अत्याचार गरिने छैन ।

[3]अर्थात् उपरोक्त पवित्रताको दावा गरेर ।

[4]अर्थात् उनको यो व्यवहार (आफ्नो पवित्रताको दाबी) उनको झूठ र बनावटीको लागि पर्याप्त छ । कुर्आन करीमको यस आयत र त्यसको अवतरणको विशेषताहरूका कथनबाट यो ज्ञात हुन्छ कि एक-अर्काको प्रशंसा तथा गुणगान् विशेषगरी हृदयहरुको पवित्रताको दाबी गर्नु ठीक एवं उचित छैन । यस कुरालाई कुर्आन करीममा अर्को स्थानमा यसप्रकार भनिएको छ :

﴿فَلَا تُزَكُّوا أَنفُسَكُمْ هُوَ أَعْلَمُ بِمَنِ اتَّقَى﴾

"स्वयं आफ्नो पवित्रता र प्रशंसा नगर, अल्लाह तआला नै जान्दछ कि तिमीमध्ये संयमी को छ ।"(अल-नज्म-३२)

(५१) के तपाईंले उनीहरूलाई देख्नु भएन जसलाई किताबको केही भाग प्राप्त भएको छ, जो मूर्ति तथा झूठा दाबीहरुमा विश्वास गर्दछन्, र काफिरहरूको पक्षमा भन्दछन् कि यिनीहरू ईमान भएकाहरूभन्दा अधिक सत्यमार्गमा छन् ?[1]

أَلَمْ تَرَ إِلَى الَّذِينَ أُوتُوا نَصِيبًا مِّنَ الْكِتَابِ يُؤْمِنُونَ بِالْجِبْتِ وَالطَّاغُوتِ وَيَقُولُونَ لِلَّذِينَ كَفَرُوا هَٰؤُلَاءِ أَهْدَىٰ مِنَ الَّذِينَ آمَنُوا سَبِيلًا ﴿٥١﴾

(५२) यिनै ती मानिसहरू हुन्, जसलाई अल्लाह (तआला) ले धिक्कारेको छ र जसलाई अल्लाह (तआला) धिक्कार दिन्छ त तिमी कसैलाई त्यसको सहायता गर्न पाउने छैनौ ।

أُولَٰئِكَ الَّذِينَ لَعَنَهُمُ اللَّهُ ۖ وَمَن يَلْعَنِ اللَّهُ فَلَن تَجِدَ لَهُ نَصِيرًا ﴿٥٢﴾

हदीसमा छ कि आदरणीय मिकदाद رضى الله عنه भन्दछन्, "नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले हामीलाई आदेश दिनुभयो कि प्रशंसा गर्नेवालाहरूको मुखमा हालिदिनुस् ।" «أَنْ نَحْثُوَ فِي وُجُوهِ الْمَدَّاحِينَ التُّرَابَ» (सहीह मुस्लिम किताबुज जुहद)

एक अन्य हदीसमा छ कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले एउटा मान्छेलाई अर्को मान्छेको प्रशंसा गरिराखेको सुने पश्चात भन्नुभयो :

"وَيْحك قطعت عُنق صاحبك" "अफसोच छ तिमीमाथि कि तिमीले आफ्नो साथीको गर्दन काटिदियौ ।" अनि आदेश गर्नुभयो कि यदि तिमीमध्येबाट कसैलाई कसैको विवश भई प्रशंसा गर्नु छ भने यसप्रकार भन्ने गर أحسبُهُ كذا "म त्यसलाई यसप्रकार ठान्दछु, अल्लाहमाथि कसैको स्वच्छता वर्णित नगर ।". (सहीह बुखारी किताबुश शहादत वल अदब, मुस्लिम किताबुज़ जुहद)

[1]यस आयतमा यहूदीहरूको एउटा अर्को कर्ममाथि आश्चर्य व्यक्त गरिएको छ कि अहले किताब़ भए उपरान्त यिनी "जिब्त" (मूर्ति, ज्योतिषि अथवा जादूगर) तथा तागूत (झूठा देवताहरु) मा विश्वास गर्दछन् र मक्काका काफ़िरहरूलाई मुसलमानहरूभन्दा बढी सत्य-मार्गमा भएको ठान्दछन् । जिब्तका यी सबै वर्णित अर्थ गरिएका छन् । एक हदीसमा आउँछ :

إِنَّ الْعِيافة والطرق والطيرة من الجبتِ

"पंक्षी उडाएर, रेखा तानेर भाग्य जान्नु एवं अपशगुन लिनु जिब्त मध्येबाट छन् ।"(सुनन अबी दाऊद किताबुत तिब)

अर्थात् यी शैतानी काम हुन् । यहूदीहरूमा यी कुरा सामान्य रूपले पाइन्थे । तागूतको एक अर्थ शैतान पनि गरिएको छ । वास्तवमा झूठा देवताहरूको पूजा शैतानकै अनुसरण हो, यसकारण शैतान पनि अवश्य तागूतमा सम्मिलित छ ।

أَمْ لَهُمْ نَصِيبٌ مِّنَ الْمُلْكِ فَإِذًا لَّا يُؤْتُونَ النَّاسَ نَقِيرًا

(५३) के उनीहरूको कुनै भाग राज्यमा छ ? यदि यस्तो भएको भए त उनी कसैलाई एक खजूरको गेडाको एक सानो टुक्राको बराबर पनि केही दिने छैनन् ।[1]

أَمْ يَحْسُدُونَ النَّاسَ عَلَىٰ مَا آتَاهُمُ اللَّهُ مِن فَضْلِهِ ۖ فَقَدْ آتَيْنَا آلَ إِبْرَاهِيمَ الْكِتَابَ وَالْحِكْمَةَ وَآتَيْنَاهُم مُّلْكًا عَظِيمًا

(५४) अथवा यिनीहरू मानिसहरूसित ईर्ष्या गर्दछन्, त्यस कुरोमा जुन अल्लाह (तआला) ले आफ्नो कृपाले उनीहरूलाई प्रदान गरेको छ ।[2] त हामीले त इब्राहीमका सन्तानलाई किताब तथा विवेक पनि प्रदान गरेका छौं र ठूलो राज्य पनि प्रदान गरेका छौं ।

فَمِنْهُم مَّنْ آمَنَ بِهِ وَمِنْهُم مَّن صَدَّ عَنْهُ ۚ وَكَفَىٰ بِجَهَنَّمَ سَعِيرًا

(५५) अनि तिनीहरू मध्ये केहीले त त्यस किताबलाई माने र केही त्यसबाट रोकिए ।[3] र यस्ताको लागि नरकको आगो पर्याप्त छ ।



[1]यो नकारात्मक प्रश्न हो अर्थात् राज्यमा यिनको कुनै भाग छैन । यदि यसमा अलिकति पनि भाग भएको भए यी यहूदीहरू यति कंजूस छन् कि मानिसहरूलाई विशेषरुपले परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई खजूरको बीउको एक टुक्रा पनि दिने थिएनन् । (نقير) नकीर त्यस बिन्दुलाई भन्दछन् जुन खजूरको गेडाको माथिल्लो भागमा हुन्छ । (इब्ने कसीर)

[2](أم) (अम्), (بل) (बल्) का अर्थहरुमा पनि हुनसक्छ अर्थात् बरु यिनी यस कुरामा ईर्ष्या गर्छन् कि अल्लाह तआलाले इस्राईलको सन्तानलाई छाडी अरुहरूमा नबी (अर्थात् अन्तिम नबी) किन बनायो ? नबूअत अल्लाहको सबभन्दा ठूलो कृपा हो ।

[3]अर्थात् इस्राईलका सन्तानलाई जो आदरणीय इब्राहीमको परिवार एवं वंश मध्येका हुन्, हामीले नबूअत पनि दियौं र ठूलो राज्य तथा राज्यअधिकार पनि । तैपनि यी सबै यहूदी उनमा विश्वास गरेनन् केहीले विश्वास गरे र केही रोकिए । तात्पर्य यो छ कि हे मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम, यदि यिनीहरू तपाईंमा विश्वास गरिराखेकाका छैनन् भने यो कुनै अनौठो कुरा होइन यिनको त इतिहास नै नबीहरुलाई झुठ्लाउने कुराले भरिएको छ । यहाँसम्मकि यिनीहरू त आफ्नो वंशका नबीहरुमा पनि विश्वास गरेनन् । केहीले (آمن به) मा (ही) सर्वनामसित तात्पर्य नबी सल्लल्लाहु अलैहि वसल्लम भनेका छन् । अर्थात् ती यहूदीहरूमा केही नबी सल्लल्लाहु अलैहि वसल्लममा विश्वास गरे र केहीले नकारे । यी इन्कार गर्नेहरूको अन्त्य नरक छ ।

إِنَّ الَّذِينَ كَفَرُوا بِآيَاتِنَا سَوْفَ نُصْلِيهِمْ نَارًا ۖ كُلَّمَا نَضِجَتْ جُلُودُهُمْ بَدَّلْنَاهُمْ جُلُودًا غَيْرَهَا لِيَذُوقُوا الْعَذَابَ ۗ إِنَّ اللَّهَ كَانَ عَزِيزًا حَكِيمًا ﴿٥٦﴾

(५६) जसले हाम्रा अयतहरुलाई अस्वीकार गरे, तिनीहरूलाई हामीले अवश्य अग्निमा हाल्नेछौं ।[1] जब तिनका छालाहरु (चर्म) पाक्छन्, हामी तिनका अतिरिक्त अन्य छालाहरु परिवर्तित गरिदिनेछौं, ताकि उनीहरू यातनाको स्वाद चाखिरहून् ।[2] अवश्य अल्लाह तआला प्रभुत्वशाली, बुद्धिमान छ ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ سَنُدْخِلُهُمْ جَنَّاتٍ تَجْرِي مِنْ

(५७) र जो ईमान स्थापित गरे र सभ्य कर्म गरे,[3] हामी निकट भविष्यमा उनीहरूलाई ती

[1]अर्थात् नरकमा अहले किताबका नकार्नेवालामात्र जाँदैनन्, बरु अन्य काफिरहरूको वासस्थान पनि नरक नै हो ।

[2]यो नरकको यातनाको कठोरता, निरन्तरता तथा नित्यताको वर्णन हो । सहाबा केराम (رضی الله عنهم) द्वारा कथित केही वाक्यहरुमा भनिएको छ कि छालाहरुको यो परिवर्तन दिनमा बीसौं बरु सयौं पटक हुनेछ र मुसनद अहमदका अनुसार "नरकवासी यति सुन्निने छन् कि तिनका कानहरुको लव (लुर्को) देखि पछाडी गर्दनसम्मको दुरी सात सय वर्ष यात्राको समान हुनेछ, उनको छालाको मोटाइ सत्तरी बालिश्त र बंगाराहरु उहुद पर्वत जत्रा हुनेछन् ।"

[3]काफिरहरूको उपदेश ईमानवालाहरूका लागि जुन चिरस्थाई सुख-सुविधा प्राप्त हुनेछ, तिनको वर्णन छ, परन्तु ती ईमानवालाहरू जो सत्कर्मले परिपूर्ण हुनेछन् (جعلنا الله منهم) । अल्लाह तआलाले कुरआन करीममा ईमानसँगै सत्कर्मको महत्व पनि स्पष्ट गरिदिएको छ कि उनीहरूको आपसमा तल-जलको सम्बन्ध छ । ईमान सत्कर्म विना त्यसैप्रकार छ जस्तो सुगन्ध बिना फूल र बिना फलको वृक्ष । सहाबा केराम (رضی الله عنهم) तथा सत्यकालका अन्य मुसलमानहरूले यस बिन्दुलाई जानेका थिए । अत: तिनीहरूको जीवन ईमानको फल, सत्कर्मले प्रफुल्लित थिए । त्यसकालमा अकर्म अथवा कु-कर्मको साथमा ईमानको कल्पना नै थिएन । यसको अतिरिक्त आजकल ईमान केवल मौखिक भनाईमा मात्र सीमित भएको छ । ईमानका बारेमा दावी गर्नेहरु सत्कर्मवाट शून्य छन् । (هدانا الله تعالى) यसैप्रकार यदि कुनै व्यक्ति यस्ता कर्म गर्दछ जुन सत्कर्मको सीमामा आउँछन् । जस्तै ईमान्दारी, सच्चाई, परोपकार, नि:स्वार्थ सेवा, सहानुभूति आदि अन्य सभ्यतापूर्ण विशेषताहरू । परन्तु यिनी ईमानको गुणवाट वञ्चित छन् भने तिनका यी कर्म संसारमा प्रसिद्ध तथा सम्मानको कारण त बन्न सक्छन्, परन्तु अल्लाहको दरवारमा उनको कुनै स्थान छैन । यसकारण कि उनको स्रोत ईमान होइन जुन राम्रो कर्मलाई अल्लाह तआलातिर सम्बन्धित गर्दछ ।

تَحْتِهَا الْأَنْهٰرُ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ؕ لَهُمْ فِيْهَآ اَزْوَاجٌ مُّطَهَّرَةٌ ؗ وَّنُدْخِلُهُمْ ظِلًّا ظَلِيْلًا ﴿٥٧﴾

स्वर्गहरुमा लैजानेछौं, जसका धरातलमा नहरहरू प्रभावित छन्, जसमा उनी सधैं रहनेछन्। उनका निम्ति त्यहाँ पवित्र पत्नीहरू हुनेछन् र हामीले उनीहरूलाई बाक्लो छायाँ (पूर्ण सुविधाजनक स्थान) मा लग्नेछौं।[1]

اِنَّ اللّٰهَ يَاْمُرُكُمْ اَنْ تُؤَدُّوا الْاَمٰنٰتِ اِلٰٓى اَهْلِهَا ۙ وَاِذَا حَكَمْتُمْ بَيْنَ النَّاسِ اَنْ تَحْكُمُوْا

(५८) अल्लाह (तआला) तिमीलाई आदेश दिन्छ कि अमानत (नासो) उनका मालिकहरूलाई पुऱ्याइदेउ।[2] र जब मानिसहरू बीच निर्णय

बरु मात्र सांसारिक लाभ तथा सामाजिक सभ्यताको बन्धनको आधारमा छ।

[1]बाक्लो गहिरो, चिसो तथा पवित्र छायाँ। जसको अनुवाद "पूर्ण सुविधा" गरिएको छ। एक हदीसमा छ "स्वर्गमा एउटा वृक्ष छ जसको छायाँ पनि छ कि एउटा सवार सय वर्षमा पनि त्यसलाई पूरा गर्न सक्दैन। यस वृक्षको नाम अलखुल्द हो। "(मुसनद अहमद, भाग २, पृष्ठ ४५५, व असलुहु फी अल-बुखारी किताब (बदउल खल्क़) अध्याय (बाब) संख्या ८, माजाअ फी सिफ़तिल जन्नः व अन्नहा मख़्लूक़:)।

[2]अधिकतर व्याख्याकारहरूको यो मत छ कि यो आयत आदरणीय उस्मान विन तल्हाको सम्मानमा उत्रेको छ, जो आफ्ना पूर्वजहरूसित पारस्परिक रूपले ख़ाना-ए-काअबाका संतरी तथा कुंजी धारक हुँदै आइराख्नु भएको थियो। मक्का विजयको समय जब रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम ख़ाना-ए-काअबामा परिक्रमाको लागि पाल्नु भयो, परिक्रमा आदिको पश्चात उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) ले आदरणीय उस्मान बिन तल्हालाई, जो हुदैबियाको सन्धिको समय मुसलमान भैसकेका थिए, बोलाउनु भयो र उनलाई ख़ाना-ए-काआबाका साँचोहरू प्रदान गर्दै भन्नुभयो, "यी तिम्रा साँचाहरू हुन्, र आजको दिन प्रतिज्ञा पालन तथा पुण्यको दिन हो।" (इब्ने क़सीर) यो आयत एउटा विशेष कारणले उत्र्यो तर यसको भावार्थ सार्वजनिक तथा अधिकारीहरू दुबैको निम्ति छ। दुबैको लागि आदेश छ कि नासो उनीहरूलाई फर्काइदेउ, जो त्यसका अधिकारी छन्। यसमा एक प्रकारको त्यो नासो छ, जो त्यसका अधिकारी छन्। यसमा एक प्रकारको त्यो नासो छ, जो कसैको पासमा राख्न लगाईन्छ। त्यस मध्येवाट उपभोग नगरियोस्, बरु यो त्यसै प्रकारले नासो राख्नेलाई फर्काइयोस्। दोस्रो यो कि पद र सम्मान योग्य व्यक्तिहरूलाई प्रदान गरियोस् केवल राजनीतिज्ञ यात्रामा वंश अथवा राष्ट्रियताको आधार अथवा निकटवर्ती अथवा सम्बन्धको आधार अथवा पद सुरक्षितको आधारमा पद तथा सम्मान दिनु यस आयतको विपरीत छ।

بِالْعَدْلِ ۭ اِنَّ اللّٰهَ نِعِمَّا يَعِظُكُمْ بِهٖ ۭ اِنَّ اللّٰهَ كَانَ سَمِيْعًۢا بَصِيْرًا ﴿٥٨﴾

गर्दछौ त न्यायले निर्णय गर ।[1] नि:सन्देह त्यो राम्रो कुरा हो जसको शिक्षा अल्लाह (तआ़ला) तिमीलाई दिइराखेको छ ।[2] नि:सन्देह अल्लाह (तआ़ला) सुन्दछ, देख्दछ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اَطِيْعُوا اللّٰهَ وَاَطِيْعُوا الرَّسُوْلَ وَاُولِي الْاَمْرِ مِنْكُمْ ۚ فَاِنْ تَنَازَعْتُمْ فِيْ شَيْءٍ

(५९) हे निष्ठावानहरू ! अल्लाहको आज्ञाको पालना गर तथा ईशदूत (सल्लल्लाहु अलैहि वसल्लम) को, र आफूमध्ये अधिकारीहरूको आज्ञाको पालना गर ।[3] अनि यदि कुनै कुरामा

[1]यसमा अधिकारीहरूलाई विशेषरुपले न्याय गर्ने आदेश दिइएको छ । एक हदीसमा छ कि अधिकारी जबसम्म अत्याचार गर्दैन, अल्लाह तआ़ला उसको साथमा हुन्छ, जब त्यो अत्याचार गर्न प्रारम्भ गरिदिन्छ, अल्लाह त्यसलाई त्यसका इन्द्रियहरुलाई सुम्पिदिन्छ । (सुनन् इब्ने माजा, किताबुल अहकाम)

[2]अर्थात् नासो त्यसका योग्य मानिसहरूलाई सुम्पिनु तथा न्याय गर्नु ।

[3]"आफूमध्येबाट अधिकारीसित तात्पर्य" केहीका निकट राज्य अधिकारी र केहीका निकट धर्माधिकारी तथा ज्ञानी हुन् । भावार्थको आधारमा दुबै हुन सक्छन् । तात्पर्य यो छ कि वास्तविक आज्ञापालन त अल्लाह तआ़लाकै हो । किनभने

﴿أَلَا لَهُ الْخَلْقُ وَالْأَمْرُ﴾

"सावधान ! सृष्टि पनि उसैको हो, आदेश पनि उसैको हो ।" (अल-आराफ-५४)

परन्तु रसूल केवल अल्लाहका इच्छाहरूको प्रतिनिधि र त्यसका दूत हुनुहुन्छ, यसकारण अल्लाह तआ़लाले आफूसँग रसूलको आदेशलाई पनि स्थाईरूपले पालन आवश्यक भनेको छ । र आदेश दिन्छ कि वास्तवमा रसूलका आदेशहरूका पालन अल्लाहकै आज्ञाको पालना हो ।

﴿مَّن يُطِعِ الرَّسُولَ فَقَدْ أَطَاعَ اللَّهَ﴾

"जसले रसूल (सल्लल्लाहु अलैहि वसल्लम) को आज्ञाको पालन गर्‍यो त्यसले अल्लाहको आज्ञाको पालना गर्‍यो ।" (अन-निसा-८०)

यसबाट यो कुरा स्पष्ट भयो कि हदीस पनि त्यसै प्रकारले धनको स्रोत हो, जुन प्रकारले कुर्‌आन करीम छ, अनि राजाधिकारीहरूको आज्ञापालन पनि आवश्यक छ किनभने उनी या त अल्लाह अथवा त्यसका रसूल (सल्लल्लाहु अलैहि वसल्लम) का आदेशहरूलाई लागू गर्दछन् अथवा उम्मत (क़ौम अथवा समुदाय) का

فَرُدُّوْهُ اِلَى اللّٰهِ وَ الرَّسُوْلِ اِنْ كُنْتُمْ تُؤْمِنُوْنَ بِاللّٰهِ وَ الْيَوْمِ الْاٰخِرِ ذٰلِكَ خَيْرٌ وَّ اَحْسَنُ تَاْوِيْلًا ﴿٥٩﴾

मतभेद गर्दछौ भने त्यसलाई अल्लाह (तआ़ला) तथा रसूल (सल्लल्लाहु अलैहि वसल्लम) तिर फर्काउ, यदि तिमीलाई अल्लाह तथा क़ेयामतको दिनमा विश्वास छ । यो सर्वश्रेष्ठ छ र परिणाम अनुसार धेरै राम्रो छ ।[1]

सामाजिक समस्याहरुको समाधान तथा रक्षा गर्दछन् । यसबाट ज्ञात हुन्छ कि राजा अधिकारीहरूका आदेशको पालना यद्यपि आवश्यक छ, परन्तु त्यो पूर्णरुपले लागू हुँदैन, बरु अल्लाह र रसूलको आज्ञापालनसँग प्रतिबन्धित छ । यसकारण अल्लाहको आज्ञा पालनको पश्चात नै रसूलको आज्ञा पालनलाई भनिएको छ । किनभने यी दुबै आज्ञापालन स्थाई र आवश्यक छन् । "परन्तु राजा अधिकारीहरूको आज्ञा पालन गर" भनिएको छैन, किनभने राजा अधिकारीहरूको आज्ञापालन स्थायी छैन । र हदीसमा पनि भनिएको छ, لا طَاعَةَ لِمَخْلُوقٍ فِي مَعصِيةِ الخالِقِ (यसलाई अलबानीले हदीस सहीह भन्नु भएको छ, मिशकात संख्या ३६९६-मुस्लिम हदीस संख्या १८४०)र اِنَّمَا الطَّاعَةُ فِي المعروف (सहीह बुखारी किताबुल अहकाम बाब-४) السَّمْعُ والطَّاعَةُ لِلْاِمامِ مَالَمْ تَكُنْ مَّعْصِيَةً "पापमा पालन होइन, पालन मात्र पुण्यहरुमा छ ।"

यही कुरा आलिम तथा धर्मशास्त्रीहरूको विषयमा पनि छ । (यदि अधिकारीहरूमा यिनलाई पनि मानिन्छ) अर्थात् तिनको आज्ञाको पालन यसकारण गर्नुपर्नेछ किनभने उनी अल्लाह र त्यसका रसूलका आदेश तथा कथनहरूलाई जनता समक्ष प्रस्तुत गर्दछन् तथा त्यसको धर्मतिर सन्देश तथा मार्गदर्शनको कार्य गर्दछन् । यसबाट ज्ञात भयो कि आलिम तथा धर्माधिकारी पनि धार्मिक विषयहरुमा अधिकारीहरु समान अवश्य जनताको लागि आज्ञापालनका अधिकारी छन् । परन्तु उनको आज्ञाको पालन पनि त्यस समयसम्म गरिनेछ, जबसम्म उनी जनतालाई केवल अल्लाह र त्यसका रसूलका कुरा भन्दछन्, परन्तु यदि उनी यसवाट विमुख हुन्छन् भने जनताको लागि उनको आज्ञापालन गर्नु पनि आवश्यक छैन । वरु उनको विमुखताको स्थितिमा जानी-जानी उनको आज्ञापालन ठूलो पाप हो ।

[1]अल्लाहतिर फर्काउनेबाट तात्पर्य कुरआन करीम तथा रसूल सल्लल्लाहु अलैहि वसल्लमबाट तात्पर्य अब रसूल सल्लल्लाहु अलैहि वसल्लमको हदीस हो । यो आपसी मतभेद समाप्त गर्नको लागि एउटा सर्वश्रेष्ठ नियम भनिएको छ । यस नियमबाट पनि स्पष्ट हुन्छ कि तेस्रो व्यक्तिको आज्ञापालन आवश्यक छैन । जुन प्रकारले अनुकरणवाद अथवा एक विशेष व्यक्तिको आज्ञापालन गर्ने कुरामा

(६०) के तपाईंले तिनीहरूलाई देख्नु भएन जसको विचार छ कि जे-जति तपाईंमाथि तथा जे-जति तपाईंभन्दा पूर्व अवतरित गरिएको छ, त्यसमा उनीहरूको ईमान छ, तर उनी आफ्नो निर्णय अल्लाह बाहेक अन्यको पासमा लैजान्छन् यद्यपि उनीहरूलाई आदेश दिइएको छ कि उनी तिनको (शैतानको) इन्कार गरुन् ? शैतान त यो चाहन्छ कि उनीहरूलाई मार्ग-विचलित गराई टाढा पारिदेओस् ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ يَزْعُمُونَ أَنَّهُمْ آمَنُوا بِمَا أُنزِلَ إِلَيْكَ وَمَا أُنزِلَ مِن قَبْلِكَ يُرِيدُونَ أَن يَتَحَاكَمُوا إِلَى الطَّاغُوتِ وَقَدْ أُمِرُوا أَن يَكْفُرُوا بِهِ وَيُرِيدُ الشَّيْطَانُ أَن يُضِلَّهُمْ ضَلَالًا بَعِيدًا ﴿٦٠﴾

(६१) र जतिखेर तिनीसित भनिन्छ कि अल्लाह (तआ़ला) ले जुन (पवित्र शास्त्र) अवतरित गरेको छ, त्यसतिर र रसूलतिर आउ त तपाईंले देख्नुहुन्छ कि यी मुनाफिक (अवसरवादी) तपाईंबाट मुख फर्काइ तर्किन्छन् ।[1]

وَإِذَا قِيلَ لَهُمْ تَعَالَوْا إِلَىٰ مَا أَنزَلَ اللَّهُ وَإِلَى الرَّسُولِ رَأَيْتَ الْمُنَافِقِينَ يَصُدُّونَ عَنكَ صُدُودًا ﴿٦١﴾

विश्वास गर्नेहरु एउटा तेस्रो व्यक्तिको आज्ञापालनलाई उचित ठहराउँछन् र यसै तेस्रो आज्ञा पालनकारिताले, जुन कुर्आनको यस आयतको स्पष्ट विरोध छ मुसलमानहरूलाई एक उम्मतको विपरीत अनेक बनाइराखेको छ तथा उनको एकतालाई असम्भव बनाइदिएको छ ।

[1]यो आयत यस्ता मानिसहरूको बारेमा उत्रेको छ, जो आफ्नो निर्णय गराउनको लागि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको न्यायलयमा लग्नुको सट्टा यहूदीहरूका मुखिया अथवा कुरैशका मुखियाको पासमा लैजान चाहन्थे परन्तु यो आदेश जन-सामान्यको लागि छ र यसमा ती सबै सम्मिलित छन् जो कुरआन र सुन्नतको विपरीत आफ्नो निर्णयको लागि यी दुवैलाई छाडी अन्यत्र लग्छन् । अन्यथा मुसलमानको अवस्था त यो हुन्थ्यो कि,

﴿إِنَّمَا كَانَ قَوْلَ الْمُؤْمِنِينَ إِذَا دُعُوا إِلَى اللَّهِ وَرَسُولِهِ لِيَحْكُمَ بَيْنَهُمْ أَن يَقُولُوا سَمِعْنَا وَأَطَعْنَا﴾

"जब उनीहरूलाई अल्लाह तथा रसूलतिर डाकिन्छ ताकि उनीहरूबीच निर्णय गरिदेउन्, त उनी भन्छन् हामीले सुन्यौं र हामीले पालन गऱ्यौं ।" (अल-नूर ५१) यस्ताकै लागि अल्लाह तआ़लाको आदेश दिनुभयो,

و اولئك هم المفلحون "यिनै सफल छन् ।"

(६२) अनि के कारण छ कि जब उनीहरू माथि उनका कर्मका कारण कुनै विपदा आइपर्छ त तपाईतिर आएर अल्लाह (तआ़ला) को शपथ लिन्छन् कि हाम्रो विचार त केवल भलाई तथा मधूर सम्बन्धकै थियो ।

فَكَيْفَ إِذَآ أَصَٰبَتْهُم مُّصِيبَةٌۢ بِمَا قَدَّمَتْ أَيْدِيهِمْ ثُمَّ جَآءُوكَ يَحْلِفُونَ بِٱللَّهِ إِنْ أَرَدْنَآ إِلَّآ إِحْسَٰنًا وَتَوْفِيقًا ﴿٦٢﴾

(६३) यी त्यसता हुन् जसका हृदयहरूको रहस्य अल्लाह (तआ़ला) लाई राम्ररी स्पष्ट छ, तपाईं उनीसित नसुनेझैं गर्नुस्, तथा उनीहरूलाई शिक्षा दिंदै रहनुस् एवं उनीहरूलाई त्यो कुरा भन्नुस् जुन उनका हृदयमा प्रभावकारी भई बसोस् ।[२]

أُو۟لَٰٓئِكَ ٱلَّذِينَ يَعْلَمُ ٱللَّهُ مَا فِى قُلُوبِهِمْ فَأَعْرِضْ عَنْهُمْ وَعِظْهُمْ وَقُل لَّهُمْ فِىٓ أَنفُسِهِمْ قَوْلًۢا بَلِيغًا ﴿٦٣﴾

(६४) र हामीले प्रत्येक रसूललाई केवल यसैको निम्ति पठायौं ताकि अल्लाह (तआ़ला) को आदेशले त्यसको आज्ञाको पालन गरियोस् र यदि जब उनीहरूले आफ्नो प्राणमाथि अत्याचार गरे तिम्रो पासमा आएको भए, र अल्लाह (तआ़ला) सित क्षमा-याचना गरेको भए र

وَمَآ أَرْسَلْنَا مِن رَّسُولٍ إِلَّا لِيُطَاعَ بِإِذْنِ ٱللَّهِ ۚ وَلَوْ أَنَّهُمْ إِذ ظَّلَمُوٓا۟ أَنفُسَهُمْ جَآءُوكَ فَٱسْتَغْفَرُوا۟ ٱللَّهَ وَٱسْتَغْفَرَ لَهُمُ

[१]अर्थात् जब आफ्नो यस कर्तुतको कारण अल्लाहको यातनाको शिकार बनी दुखमा पर्छन्, त्यतिखेर आएर भन्दछन् कि कुनै अन्य स्थानमा जानुको उद्देश्य यो थिएन कि हामी त्यहाँबाट निर्णय गराऔं अथवा तपाईं सल्लल्लाहु अलैहि वसल्लमसित अधिक न्याय पाइनेछ, बरु हाम्रो उद्देश्य त सन्धि तथा मेलमिलाप गराउनु थियो ।

[२]अल्लाह तआ़लाले आदेश गर्‍यो कि यद्यपि हामी उनका हृदयका सबै रहस्यहरूबाट अवगत छौं (जसको फल हामीले उनीहरूलाई दिनेछौं) तर हे पैग़म्बर ! तपाईं उनीहरूको प्रत्यक्षलाई अगाडी राखी क्षमा नै गर्नुस् र शिक्षा-दीक्षा तथा यस्ता कुरा भन्नुस् जो उनका हृदयमा बसिहालोस्, र यसबाट उनको अन्तरको सुधारको प्रयत्न निरन्तर गर्दैरहनुस् । यसबाट ज्ञात भयो कि शत्रुका षड्यन्त्रहरूलाई क्षमा तथा नसुनेझैं गरी शिक्षा-दीक्षा तथा हृदयस्पर्शी भाषाणद्वारा नै निष्काम बनाउने प्रयत्न गर्नुपर्दछ ।

الرَّسُوۡلُ لَوَجَدُوا اللّٰهَ تَوَّابًا رَّحِيۡمًا ﴿٦٤﴾

रसूल पनि उनीहरूका लागि क्षमा-याचना गरेको भए,[1] निःसन्देह यिनीहरूले अल्लाह तआलालाई क्षमाशील कृपालु पाउने थिए ।

فَلَا وَ رَبِّكَ لَا يُؤۡمِنُوۡنَ حَتّٰى يُحَكِّمُوۡكَ فِيۡمَا شَجَرَ بَيۡنَهُمۡ ثُمَّ لَا يَجِدُوۡا فِىۡۤ اَنۡفُسِهِمۡ حَرَجًا مِّمَّا قَضَيۡتَ وَيُسَلِّمُوۡا تَسۡلِيۡمًا ﴿٦٥﴾

(६५) त सौगन्ध छ तिम्रो प्रभुको ! यिनी (तबसम्म) ईमान भएका हुनसक्दैनन् जबसम्मकि सबै आपसको मतभेदमा तपाईंलाई न्यायिक स्वीकार गर्दैनन्, अनि जुन निर्णय तपाई गर्नुहुन्छ त्यसबाट आफ्ना हृदयमा अलिकति पनि कलुषता तथा अप्रसन्नता पाउँदैनन् र आज्ञाकारी भैं स्वीकार गर्दछन् ।[2]

[1]मोक्षको लागि अल्लाह तआलाको सदनमा क्षमा-याचना गर्नु आवश्यक एवं पर्याप्त छ । तर यहाँ भनिएको छ कि हे पैगम्बर ! यदि तिम्रो सामु आएका भए र अल्लाहसित क्षमा-याचना गरेको भए र तिमीले पनि उनीहरूको लागि क्षमा-याचना गरेको भए । यो यसकारण कि आफ्ना मतभेदहरूको निर्णयको लागि अरुहरूको पासमा गई तपाईंको अवहेलना गरेका थिए, यसकारण त्यसको निवारणको निम्ति तपाईंको पासमा आउने कुरामा विशेष जोड दिइयो ।

[2]यस आयतको अवतरणको विषयमा एक यहूदी र मुसलमानको घटनाको सामान्यतः वर्णन हुन्छ, जुन अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लमको सदनमा निर्णय पश्चात आदरणीय उमर رضی الله عنه बाट निर्णय गराइयो, जस पश्चात आदरणीय उमर رضی الله عنه ले त्यस मुसलमानको टाउको जीउबाट अलग गरिदिनुभयो । तर यो वाक्य प्रमाणयुक्त छैन जस्तो कि हाफिज इब्ने कसीरले पनि स्पष्ट गर्नुभएको छ । सही घटना यो हो जुन यस आयत अवरतण हुनुको कारण हो कि आदरणीय जुबैर رضی الله عنه जो रसूल सल्लल्लाहु अलैहि वसल्लमकि फूफीका पुत्र थिए, एउटा मानिसको खेतको सिंचाई गर्नको लागि नालीको पानी सम्बन्धि झगडा थियो । यो विवाद नबी सल्लल्लाहु अलैहि वसल्लम सम्म पुग्यो, उहाँ सल्लल्लाहु अलैहि वसल्लमले विवादको घटनास्थलको निरीक्षण गर्नुभयो, न्यायको अनुसार निर्णय आदरणीय जुबैर رضی الله عنه को पक्षमा भयो, जसमाथि अर्को व्यक्तिले यो भन्यो कि उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) ले यो निर्णय यसकारण गर्नु भएको छ कि उनी उहाँ सल्लल्लाहु अलैहि वसल्लम कि फूफीका पुत्र हुन् । यस पश्चात यो आयत अवतरित भयो । (सहीह बुखारी तफ़सीर सूरः अल-निसा) आयतको अर्थ यो भयो कि नबी सल्लल्लाहु अलैहि वसल्लमको कुनै कुरा अथवा निर्णयको विरोध त अलग हृदयमा संकीर्णता पनि ईमानको विपरीत छ । यो आयत पनि हदीसका ईन्कार गर्नेवालाहरूको लागि त छँदैछ, अन्य मानिसहरूको लागि पनि विचारणीय छ, जो इमामको कथनको सापेक्ष सहीह हदीसलाई मान्नबाट संकुचित

وَلَوْ أَنَّا كَتَبْنَا عَلَيْهِمْ أَنِ اقْتُلُوا أَنفُسَكُمْ أَوِ اخْرُجُوا مِن دِيَارِكُم مَّا فَعَلُوهُ إِلَّا قَلِيلٌ مِّنْهُمْ ۖ وَلَوْ أَنَّهُمْ فَعَلُوا مَا يُوعَظُونَ بِهِ لَكَانَ خَيْرًا لَّهُمْ وَأَشَدَّ تَثْبِيتًا ﴿٦٦﴾

(६६) र यदि हामीले उनीहरूलाई यो अनिवार्य गर्दथ्यौं कि आफैंले आफ्नो हत्या गर अथवा आफ्ना घरहरुबाट निस्केर जाऊ, त त्यसलाई तिनीमध्ये धेरै कम मानिसहरूले पालना गर्दथे । र यदि यिनीहरू त्यही गर्छन् जसको उनीहरूलाई शिक्षा दिइन्छ भने, अवश्य नै उनको लागि श्रेष्ठकर हुन्छ र अत्याधिक सुदृढ हुन्छन् ।[1]

وَإِذًا لَّآتَيْنَاهُم مِّن لَّدُنَّا أَجْرًا عَظِيمًا ﴿٦٧﴾

(६७) र तब त हामीले उनीहरूलाई आफ्नो पासबाट धेरै पुण्य प्रदान गर्दथ्यौं ।

وَلَهَدَيْنَاهُمْ صِرَاطًا مُّسْتَقِيمًا ﴿٦٨﴾

(६८) र निःसन्देह उनीहरूलाई सत्य मार्गदर्शन गर्दथ्यौं ।

وَمَن يُطِعِ اللَّهَ وَالرَّسُولَ فَأُولَٰئِكَ مَعَ الَّذِينَ أَنْعَمَ اللَّهُ عَلَيْهِم مِّنَ النَّبِيِّينَ وَالصِّدِّيقِينَ وَالشُّهَدَاءِ وَالصَّالِحِينَ ۚ وَحَسُنَ أُولَٰئِكَ رَفِيقًا ﴿٦٩﴾

(६९) र जसले पनि अल्लाह (तआला) तथा रसूल (सल्लल्लाहु अलैहि वसल्लम) का आज्ञाको पालन गर्दछन्, तिनी ती मानिसहरूको साथमा हुनेछन्, जसमाथि अल्लाह (तआला) ले आफ्नो कृपा गरेको छ, जस्तो नबी र सत्यवादी तथा शहीद एवं

मात्र हुँदैन, अपितु उनी स्पष्ट शब्दहरुमा त्यसलाई मान्नबाट इन्कार गर्दछन् अथवा त्यो भन्नेहरुको मान्य श्रृङ्खलालाई अथवा अन्य केही कारणहरू भनेर अनुचित रूपले त्यसलाई असत्य कथन सिद्ध गर्दछन् ।

[1]आयतमा ती नै आज्ञाकारी मानिसहरूको दुर्व्यवहारतिर संकेत गरेर भनिंदैछ कि यदि उनीहरूलाई आदेश दिएको भए कि एक-अर्काको हत्या गर अथवा आफ्ना घरहरुबाट निस्केर जाउ त जब यिनी सजिलोभन्दा सजिलो कुराको पालन गर्न सकेनन्, भने यस अनुसार कसरी कर्म गर्न सक्दथे ? यो अल्लाह तआलाले आफ्नो ज्ञानबाट उनको विषयमा भनेको छ जुन निःसन्देह घटनाहरूका अनुसार छन् । तात्पर्य यो हो कि कठिन आदेशहरूको पालना त निश्चय गाह्रो छ, तर अल्लाह तआला अति दयालु तथा अति कृपालु छ, त्यसका आदेश पनि सरल छन् । यसकारण यदि यिनीहरू यी आदेशहरुमा हिंड्छन् जसको उनीहरूलाई शिक्षा दिईदैछ, त यो उनको निम्ति श्रेष्ठता तथा स्थिरताको कुरा हुन्छ, किनभने ईमानको आज्ञा-पालनबाट बृद्धि हुन्छ र पाप घट्दछ । पुण्यबाट पुण्यको मार्ग खुल्दछ र पापबाट पाप जन्मिन्छ ।

पुण्य सदाचारीहरुका (साथमा), यी राम्रा साथी हुन् ।[1]

(७०) यो अल्लाह (तआला) को तर्फबाट कृपा हो र अल्लाह (तआला) नै पर्याप्त जानकार छ ।

ذَٰلِكَ الْفَضْلُ مِنَ اللَّهِ ۚ وَكَفَىٰ بِاللَّهِ عَلِيمًا

[1]अल्लाह र रसूलका आज्ञा पालनको प्रतिकार सम्बन्धमा भनिदैछ । यसकारण हदीसमा भनिन्छ, الْمَرْءُ مع من أحبَّ (सहीह बुख़ारी किताबुल आदाब, बाब संख्या ९७ अलामतु हुब्बिल्लाह अज्ज व जल्ल, मुस्लिम किताबुल बिर्र वल सिल:वल आदाब, बाब अल-मरउ मन अहब्ब, हदीस संख्या १६४०) "मानिस त्यसैसँग हुनेछ, जोसित उसको प्रेम हुनेछ ।" आदरणीय अनस رضى الله عنه भन्नुहुन्छ, "सहावालाई रसूल (सल्लल्लाहु अलैहि वसल्लम) को कथन सुनेर यति प्रसन्नता भयो, कि यति प्रसन्नता कहिल्यै भएन ।" किनभने उनी स्वर्गमा पनि रसूलुल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) को साथ चाहन्थे । यसको अवतरणको विशेषताको कथन यसप्रकार छ कि केही सहावाले नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा भनें कि अल्लाह तआला तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई स्वर्गमा सर्वश्रेष्ठ स्थान प्रदान गर्नेछ र हामीलाई त्यसभन्दा मुनि स्थान प्राप्त हुनेछ र यसप्रकार हामी तपाईं सल्लल्लाहु अलैहि वसल्लमको संगत तथा निकटता एवं दर्शनबाट बञ्चित रहने छौं, जुन हामीलाई संसारमा प्राप्त छ । अत: अल्लाह तआलाले यो आयत अवतरित गरी उनका हृदयलाई सन्तोष प्रदान गऱ्यो । (इब्ने कसीर) केही सहावाले विशेषरूपले नबी सल्लल्लाहु अलैहि वसल्लमसित स्वर्गमा सँगै हुने प्रार्थना गरे أَسْئَلُكَ مُرافقتك فى الجنةِ जस पश्चात नबी सल्लल्लाहु अलैहि वसल्लमले उनीहरूलाई अधिकताले (बढीभन्दा बढी) ऐच्छिक (नफ़िल) नमाज़ पढ्ने कुरोमा जोड दिनुभयो । فَأعنى علىٰ نفسك بِكثرةِ السُّجُودِ (सहीह मुस्लिम, किताबुल सलात, बाव फ़जलिस्सुजूद वल हस्से अलैहि, हदीस संख्या ४८८) "बस, तिमी सज़दाहरूको अधिकतावाट मेरो सहायता गर ।" यसको अतिरिक्त एक अन्य हदीस छ ।

التَّاجِرُ الصَّدُوقُ الأمِينُ مع النَّبيين وَالصِّدِيقين والشهداء

"उचित सत्यवादी ईमान्दार व्यापारी नबी सत्यवादी तथा शहीदहरूको साथमा हुनेछन् ।" (तिर्मिजी किताबुल बुयुअ)

सिद्दीकियत पूर्ण विश्वास तथा सम्पूर्ण आज्ञापालनको नाम हो, नबूअत पश्चात यसको स्थान छ। मुसलमानहरूमा त्यस स्थानको लागि आदरणीय अबूबक्र सिद्दीक सर्वश्रेष्ठ हुनुहुन्छ र यसैकारण सर्वसम्मतिले नबीहरूका अतिरिक्त उनको नबी सल्लल्लाहु अलैहि वसल्लम पश्चात सर्वश्रेष्ठ स्थान छ। सत्यकर्मी त्यो हो जो अल्लाहको अधिकार र व्यक्तिहरूको अधिकार पूर्णरूपले दिन्छ र त्यसमा आलस्य नगरोस् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ خُذُوا۟ حِذْرَكُمْ فَٱنفِرُوا۟ ثُبَاتٍ أَوِ ٱنفِرُوا۟ جَمِيعًا ﴿٧١﴾

(७१) हे मुसलमानहरू ! आफ्नो रक्षा सामग्री लेऊ,[1] अनि समूह-समूह बनाई प्रस्थान गर अथवा सबैजना एक साथ प्रस्थान गर ।

وَإِنَّ مِنكُمْ لَمَن لَّيُبَطِّئَنَّ فَإِنْ أَصَٰبَتْكُم مُّصِيبَةٌ قَالَ قَدْ أَنْعَمَ ٱللَّهُ عَلَىَّ إِذْ لَمْ أَكُن مَّعَهُمْ شَهِيدًا ﴿٧٢﴾

(७२) र निःसन्देह तिमीमध्ये केही यस्ता पनि छन् जो संकोच गर्दछन्[2] अनि यदि तिमीलाई कुनै हानि हुन्छ भने भन्दछन् कि ममाथि अल्लाह (तआला) ले ठूलो कृपा गऱ्यो कि म उनको साथमा उपस्थित थिएन ।

وَلَئِنْ أَصَٰبَكُمْ فَضْلٌ مِّنَ ٱللَّهِ لَيَقُولَنَّ كَأَن لَّمْ تَكُنۢ بَيْنَكُمْ وَبَيْنَهُۥ مَوَدَّةٌ يَٰلَيْتَنِى كُنتُ مَعَهُمْ فَأَفُوزَ فَوْزًا عَظِيمًا ﴿٧٣﴾

(७३) र यदि तिमीलाई अल्लाह (तआला) को कुनै कृपा प्राप्त हुन्छ[3] त मानौं कि तिमी र त्यसबीच सम्बन्ध नै थिएन,[4] भन्दछन् कि काश ! म पनि उनको साथमा भएको भए त ठूलो सफलतामा पुग्थें ।[5]

فَلْيُقَٰتِلْ فِى سَبِيلِ ٱللَّهِ ٱلَّذِينَ يَشْرُونَ ٱلْحَيَوٰةَ ٱلدُّنْيَا بِٱلْءَاخِرَةِ

(७४) परन्तु जसले संसारको जीवन परलोक (आख़िरत) को साटो बेचिसकेछन्,[6] उनीहरूले अल्लाह

[1] आफ्नो बचाव गर, अस्त्र-शस्त्र तथा युद्धको सामग्री र अन्य साधनबाट ।

[2] यो अवसरवादीहरूको वर्णन हो । संकोचको अर्थ धर्मयुद्धमा जानुबाट पन्छिन्छन् र पछाडी रहन्छन् ।

[3] अर्थात् युद्धमा विजय, प्रभावशाली तथा प्राप्त सामान ।

[4] अर्थात् मानौं उनी तिम्रा धर्मका मानिसहरू मध्येका हुँदै होइनन्, बरु अन्य हुन् ।

[5] अर्थात् युद्धबाट प्राप्त सामग्रीमा भागीदार हुन्थ्यो, जुन स्वार्थ साधकहरूको सर्वश्रेष्ठ उद्देश्य हो ।

[6] شرى يشري को अर्थ बेच्नु पनि हुन्छ र किन्नु पनि । मूलमा पहिलो अनुवाद लिइएको छ । यस आधारमा فليقاتل को कर्ता الذين يشرون الحيوة हुनेछ, परन्तु यसको अर्थ किन्नको लागि लिइन्छ भने यस अवस्थामा الذين कर्मकारक बन्नेछ र فليقاتل को कर्ता المؤمن النافر (धर्मयुद्धमा प्रस्थान गर्नेवाला मुसलमान) लुप्त हुनेछ । अर्थात् यो हुनेछ कि "मुसलमान उनीहरूसित लड्न जसले परलोक (आख़िरत) बेचेर

وَمَنْ يُّقَاتِلْ فِيْ سَبِيْلِ اللّٰهِ فَيُقْتَلْ اَوْ يَغْلِبْ فَسَوْفَ نُؤْتِيْهِ اَجْرًا عَظِيْمًا ﴿٧٤﴾

(तआ़ला) को मार्गमा धर्मयुद्ध गर्नुपर्छ र जो अल्लाह तआ़लाको मार्गमा धर्मयुद्ध गर्दागर्दै शहीद हुन्छ अथवा विजयी हुन्छ त, निःसन्देह हामीले त्यसलाई सर्वश्रेष्ठ प्रतिफल प्रदान गर्नेछौं ।

وَمَا لَكُمْ لَا تُقَاتِلُوْنَ فِيْ سَبِيْلِ اللّٰهِ وَالْمُسْتَضْعَفِيْنَ مِنَ الرِّجَالِ وَالنِّسَآءِ وَالْوِلْدَانِ الَّذِيْنَ يَقُوْلُوْنَ رَبَّنَآ اَخْرِجْنَا مِنْ هٰذِهِ الْقَرْيَةِ الظَّالِمِ اَهْلُهَا وَاجْعَلْ لَّنَا مِنْ لَّدُنْكَ وَلِيًّا ۚ وَّاجْعَلْ لَّنَا مِنْ لَّدُنْكَ نَصِيْرًا ﴿٧٥﴾

(७५) तिमीलाई के भएको छ कि अल्लाहको मार्गमा र ती शक्तिहीन पुरुष, स्त्री तथा अवोध नानीहरूको छुटकाराको निम्ति धर्मयुद्ध गर्दैनौ ? जो यसप्रकार प्रार्थना गरिराखेका छन् कि हे हाम्रा प्रभु ! यी अत्याचारीहरूको वस्तीबाट हामीलाई निकाल र हाम्रो लागि स्वयं आफ्नो पासबाट पक्षधर निर्धारित गर र हाम्रो लागि विशेषरूपले आफ्नो तर्फबाट सहायक बनाउ ।[1]

اَلَّذِيْنَ اٰمَنُوْا يُقَاتِلُوْنَ فِيْ سَبِيْلِ اللّٰهِ ۚ

(७६) जसले विश्वास गरे, उनी त अल्लाह (तआ़ला) को मार्गमा धर्मयुद्ध गर्दछन् र जसले

संसार किने ।" अर्थात् जसले संसारको अलिकति धनको लोभमा आफ्नो धर्मलाई वेचिहाले । तात्पर्य अवसरवादी तथा काफ़िर हुनेछन् । (इब्ने कसीरले यसै भावार्थको वर्णन गर्नुभएको छ)

[1]अत्याचारीहरूको वस्तीबाट (आयतको अवरतणको आधारमा) तात्पर्य मक्का हो । हिज़रत पश्चात त्यहाँ शेष रहेका मुसलमान विशेषरूपले वृद्ध पुरुष, स्त्री र वच्चाहरु काफ़िरहरूको अत्याचारबाट विरक्त भई अल्लाहको दरबारमा सहायताको निम्ति प्रार्थना गर्दथे । अल्लाह तआ़लाले मुसलमानहरूलाई चेतावनी दियो कि तिमी مستضعفين (उपरोक्त वर्णित कमजोर व्यक्तिहरू) लाई काफ़िरहरूबाट मुक्त गराउन धर्मयुद्ध किन गर्दैनौं ? यस आयतबाट निष्कर्ष निकालेर विद्वानहरूले भनें कि जुन क्षेत्रमा पनि मुसलमान काफ़िरहरूका अत्याचारबाट शिकार भइराखेका छन् त अन्य मुसलमानहरूको लागि अनिवार्य छ कि काफ़िरहरूको अत्याचार बाट मुक्त गराउनको लागि धर्मयुद्ध गरून् । यो धर्मयुद्धको दोस्रो रूप हो । पहिलो रूप अल्लाहको आदेश अर्थात् त्यसको धर्मको प्रचार-प्रसार तथा अल्लाह तआ़लाका आदेशहरुको प्रभावका लागि युद्ध गर्नु, जसको वर्णन यसभन्दा पहिलो आयत तथा आगामी आयतमा छ ।

وَالَّذِيْنَ كَفَرُوْا يُقَاتِلُوْنَ فِيْ سَبِيْلِ الطَّاغُوْتِ فَقَاتِلُوْٓا اَوْلِيَآءَ الشَّيْطٰنِ ۚ اِنَّ كَيْدَ الشَّيْطٰنِ كَانَ ضَعِيْفًا ﴿٧٦﴾

कुफ्र (अस्वीकार) गरेका छन्, उनीहरू त राक्षसको मार्गमा युद्ध गर्दछन्,[1] तसर्थ तिमी शैतानका मित्रहरूसित युद्ध गर, विश्वास गर कि शैतानको चाल (निकै क्षीण तथा) अत्याधिक शक्तिहीन छ।[2]

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ قِيْلَ لَهُمْ كُفُّوْٓا اَيْدِيَكُمْ وَاَقِيْمُوا الصَّلٰوةَ وَاٰتُوا الزَّكٰوةَ ۚ فَلَمَّا كُتِبَ عَلَيْهِمُ الْقِتَالُ اِذَا فَرِيْقٌ مِّنْهُمْ يَخْشَوْنَ النَّاسَ كَخَشْيَةِ اللّٰهِ اَوْ اَشَدَّ خَشْيَةً ۚ وَقَالُوْا رَبَّنَا لِمَ كَتَبْتَ عَلَيْنَا الْقِتَالَ ۚ لَوْلَآ اَخَّرْتَنَآ اِلٰٓى

(७७) के तिमीले उनीहरूलाई देखेनौं जसलाई आदेश दिइयो कि आफ्ना हातहरूलाई रोकिराख र नमाज़ पढ्दै गर र ज़कात तिर्दैगर। अनि जब उनीहरूलाई धर्मयुद्धको आदेश दिइयो, त त्यतिखेर उनीहरूको एउटा समूह मानिसहरूसित यसप्रकार भयभीत थियो, जस्तो अल्लाह (तआला) को भय छ, बरु यसभन्दा पनि अधिक। र भन्नथाले, हे हाम्रा प्रभु! तिमीले हामीलाई धर्मयुद्ध किन अनिवार्य गऱ्यौ?[3] हामीलाई क़िन अलिकति जीवन अझै

[1]मुसलमान र काफ़िर दुवैलाई युद्धको आवश्यकता हुन्छ। परन्तु दुवैको युद्धको उद्देश्यमा ठूलो अन्तर छ। मुसलमान अल्लाहको लागि युद्ध गर्दछ, मात्र संसार अथवा राज्य विस्तारको लागि होइन।

[2]मुसलमानहरूलाई प्रलोभन दिइएको छ कि शैतानी उद्देश्यहरूका लागि बहाना तथा चाल क्षीण हुन्छन्, प्रत्यक्ष साधनहरूको प्रशस्तता एवं अधिक संख्याबाट नतर्स, तिम्रो विश्वास बल तथा तिम्रो धर्मयुद्धको संकल्पको अगाडी शैतानका शिष्यहरू टिक्न सक्दैनन्।

[3]मक्कामा मुसलमान संख्या तथा संसाधनको कमीको कारण उनीहरू लड्न योग्य थिएनन्। यसकारण उनको इच्छाको विपरीत उनीहरूलाई युद्धबाट रोकिराखियो। र दुई कुरामा जोड दिँदै गरियो, एक यो कि काफ़िरहरूको अत्याचारलाई धैर्य तथा साहसले सहन गरुन् र क्षमा सहिष्णुताबाट काम लिउन्। दोस्रो यो कि नमाज़, ज़कात तथा अन्य अर्चना शिक्षाहरूको अनुरूप कार्य गरुन् ताकि अल्लाह तआलासित सम्बन्ध दृढ आधारहरुमा स्थित होस्। तथा हिज़रत पश्चात मदीनामा जब मुसलमानहरूको शक्ति एकत्रित भयो त पुनः उनीहरूलाई युद्धको अनुमति दिइयो। र जब अनुमति दिइयो, त केही व्यक्तिहरूले निर्बलता तथा साहस विहीनताको प्रदर्शन गरे। यस आयतमा मक्काको समयमा तिनीहरूका आकांक्षा स्मरण गराउँदै भनिँदैछ कि अब यी मुसलमान धर्मयुद्धको

أَجَلٍ قَرِيبٍ ۗ قُلْ مَتَاعُ الدُّنْيَا قَلِيلٌ ۚ وَالْآخِرَةُ خَيْرٌ لِّمَنِ اتَّقَىٰ وَلَا تُظْلَمُونَ فَتِيلًا

व्यतीत गर्न दिइएन ?[1] तपाईं भनिदिनुस् कि संसारको लाभ त धेरै कम छ र परहेज़गारहरूको लागि आखिरत (परलोक) श्रेष्ठ छ, र तिमी एउटा धागो समान पनि अत्याचार गरिने छैनौं ।

أَيْنَ مَا تَكُونُوا يُدْرِككُّمُ الْمَوْتُ وَلَوْ كُنتُمْ فِي بُرُوجٍ مُّشَيَّدَةٍ ۗ وَإِن

(७८) तिमी जहाँसुकै भएपनि मृत्युले तिमीलाई आई समात्नेछ, चाहे तिमी बलिया महलहरूमा होउ ।[2] र

आदेश सुनेर भयभीत किन भइराखेका छन् ? जबकि यो धर्मयुद्ध त स्वयं उनको कामनाको अनुरूप छ ।

कुरआनको आयत बदलिनु आयतको पहिलो भाग जसमा युद्धबाट हात रोकिराख्ने आदेश छ, यसबाट केहीले यो निष्कर्ष निकालेका छन् कि नमाज़मा रूकूअमा जाँदा र रूकूअबाट उठ्नेबेला हातहरूलाई दुबै कानसम्म उठाउनु हुँदैन (जसलाई रफ़उल यदैन भन्दछन्) किनभने अल्लाह तआलाले कुरआन करीममा नमाजको अवस्थामा हात रोकिराख्ने आदेश दिएको छ, यो एउटा अनुचित र वेकार तर्क छ । यसको लागि ती महान व्यक्तिहरूले आयतका शब्द पनि बदलेका छन् र अर्थ पनि । अर्थात् शाब्दिक भावार्थ दुवैमा परिवर्तन गरिहालेका छन् ।

[1]यसको अर्को अनुवाद यो पनि गरिएको छ कि यस धर्मयुद्धको आदेशलाई केही समयका लागि स्थगित किन गरिएन ? अर्थात् أجل قريب बाट तात्पर्य मृत्यु अथवा धर्मयुद्धको समय हो । (तफ़सीर इब्ने कसीर)

[2]यस्ता कमजोर मुसलमानहरूलाई सम्झाउनको निम्ति भनिंदै छ कि संसार क्षणभंगुर छ तथा यसको लाभ अस्थाई छ, जसको लागि तिमी समय माँगिराखेका छौ, जसको अपेक्षा परलोक (आख़िरत) सर्वश्रेष्ठ छ, जसलाई तिमी अल्लाह तआलाको आज्ञाकारी भई प्राप्त गर्न सक्नेछौ । दोस्रो यो कि तिमी धर्मयुद्ध गर अथवा नगर, मृत्यु त आफ्नो समयमा आएर नै रहनेछ, चाहे तिमी बलिया दुर्गहरुमा नै गई किन न लुकिहाल । अनि धर्मयुद्धबाट ज्यान जोगाउन के लाभ ? "सुदृढ दुर्गहरु" बाट तात्पर्य वलिया तथा अग्ला भित्ताहरुवाट घेरिएको दुर्ग हुन् ।

**टिप्पणी :** केही मुसलमानहरूलाई प्राकृतिक रूपले यो भय थियो । यसैप्रकार विलम्व गर्नुको कामना पनि आपत्ति अथवा इन्कारको लागि थिएन, बरु प्राकृतिक भयको एउटा तार्किक परिणाम थियो । यसकारण अल्लाह तआलाले त्यसलाई क्षमा गरिदियो र अत्याधिक सुदृढ तर्कबाट उनलाई सहारा तथा साहस दियो ।

تُصِبْهُمْ حَسَنَةٌ يَقُولُوا هَٰذِهِۦ مِنْ عِندِ ٱللَّهِ ۖ وَإِن تُصِبْهُمْ سَيِّئَةٌ يَقُولُوا هَٰذِهِۦ مِنْ عِندِكَ ۚ قُلْ كُلٌّ مِّنْ عِندِ ٱللَّهِ ۖ فَمَالِ هَٰٓؤُلَآءِ ٱلْقَوْمِ لَا يَكَادُونَ يَفْقَهُونَ حَدِيثًا ﴿٧٨﴾

यदि थिनीहरूलाई कुनै अनुकूल राम्रो कुरा आउँछ भने भन्दछन् कि यो अल्लाह (तआ़ला) को तर्फबाट हो र यदि कुनै नराम्रो कुरो पुग्दछ भने भन्दछन् कि यो तिमीतिरबाट हो ।[1] उनीहरूलाई भनिदेउ, यो सबैथोक अल्लाह तआ़लाका तर्फबाट हुन् । उनीहरूलाई के भएको छ कि कुनै कुरा बुझ्ाईको नजिक पनि छैनन् ।[2]

مَّآ أَصَابَكَ مِنْ حَسَنَةٍ فَمِنَ ٱللَّهِ ۖ وَمَآ أَصَابَكَ مِن سَيِّئَةٍ فَمِن

(७९) तिमीलाई जुन भलाई प्राप्त हुन्छ, त्यो अल्लाह (तआ़ला) को तर्फबाट हो ।[3] र जुन नराम्रो

[1]यहाँबाट पुनः अवसरवादीहरूका कुराको वर्णन भइराखेको छ । विगत समुदायका अवसरवादीहरू झैं थिनीहरूले पनि भनें कि भलाई (सम्पन्नता, अन्नको उपज, धन तथा सन्तानको अधिकता आदि) अल्लाहको तर्फबाट हो । नराम्रो कुरा (खडेरी, धन-धान्यमा कमी आदि) हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) ! तिमीतिरबाट अर्थात् तिम्रो धर्म स्वीकार गर्नुको कारण यो विपदा आएको छ । जुनप्रकारले (आदरणीय) मूसा अलैहिस्सलाम र फ़िरऔनका अनुयायीहरूको विषयमा अल्लाह तआ़लाले आदेश गरेको छ, "जब उनीहरूलाई भलाई पुग्दछ त भन्दछन्, यो हाम्रो लागि हो (हामी यसका पात्र हौं) र जब उनलाई नराम्रो कुरा पुग्दछ, त (आदरणीय) मूसा र उनका अनुयायीहरूबाट अपशगुन लिन्छन् ।" (अर्थात् अल्लाहको शरण, अशुभको कारण उनैलाई भन्दछन्) (अल-आराफ़-१३१)

[2]अर्थात् शुभ-अशुभ दुवै अल्लाहको तर्फबाट हो । तर यो ज्ञानको कमी तथा मूर्खताको कारण कुरोलाई बुझ्दैनन् ।

[3]अर्थात् मात्र उसको कृपा एवं दयाबाट हो । अर्थात् कुनै पुण्य अथवा आज्ञापालनको प्रतिफल होइन । किनभने पुण्यको सामर्थ्य पनि अल्लाह तआ़लाले नै दिन्छ । यसका अतिरिक्त उसको कृपा यति असीम छ कि एउटा मानिसको बन्दना तथा आज्ञा पालन त्यसको अपेक्षा कुनै मुल्य राख्दैन । यसकारण नबी सल्लल्लाहु अलैहि वसल्लम ले भन्नुभयो, "स्वर्गमा जो पनि जानेछ, मात्र अल्लाहकै कृपाले जानेछ (आफ्ना कर्महरुको कारणले होइन) ।" सहचरहरुले भने, "हे रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम. र तपाईं पनि अल्लाहको कृपा बिना स्वर्गमा जानु हुनेछैन ?" उहाँ सल्लल्लाहु अलैहि वसल्लम. ले भन्नुभयो कि हो, जबसम्म अल्लाह तआ़लाले मलाई पनि आफ्नो कृपाको छायाँमा पार्दैन, स्वर्गमा जानेछैन । (सहीह बुख़ारी किताबुल रिक़ाक़ अध्याय संख्या १८)

نَفْسِكَ ؕ وَ اَرْسَلْنٰكَ لِلنَّاسِ رَسُوْلًا ؕ وَكَفٰى بِاللّٰهِ شَهِيْدًا ۝٧٩

कुरा पुग्दछ त त्यो तिम्रो स्वयंको तर्फबाट छ[1] हामीले तिमीलाई मानव जातिको निम्ति सन्देशवाहक बनाएर पठाएका छौं तथा अल्लाह (तआ़ला) पर्याप्त छ ।

مَنْ يُّطِعِ الرَّسُوْلَ فَقَدْ اَطَاعَ اللّٰهَ ۚ وَمَنْ تَوَلّٰى فَمَآ اَرْسَلْنٰكَ عَلَيْهِمْ حَفِيْظًا ۝٨٠

(८०) यस रसूल (सल्लल्लाहु अलैहि वसल्लम) लाई जसले अनुसरण गऱ्यो, त्यसैले अल्लाह (तआ़ला) को आज्ञाकारिता गऱ्यो र जसले मुख फर्कायो त हामी तपाईंलाई उनीमाथि कुनै रक्षक बनाएर पठाएका छैनौं ।

وَيَقُوْلُوْنَ طَاعَةٌ ۫ فَاِذَا بَرَزُوْا مِنْ عِنْدِكَ بَيَّتَ طَآئِفَةٌ مِّنْهُمْ غَيْرَ الَّذِيْ تَقُوْلُ ؕ وَاللّٰهُ يَكْتُبُ مَا يُبَيِّتُوْنَ ۚ فَاَعْرِضْ عَنْهُمْ وَتَوَكَّلْ عَلَى اللّٰهِ ؕ وَكَفٰى بِاللّٰهِ وَكِيْلًا ۝٨١

(८१) र यिनी भन्न त भन्छन् कि अनुकरण छ, अनि जब तपाईंको पासबाट उठेर बाहिर निस्कन्छन्, त उनीहरूमध्ये एउटा गुट अथवा समूह जुन कुरो तपाईंले अथवा त्यसले भनेको छ, त्यसको विपरीत रातिमा विचार-विमर्श गर्दछ ।[2] उनका रातिहरुका कुरा अल्लाह (तआ़ला) लेखिराखेको छ । तपाईं उनीबाट मुख फर्काउनुस् र अल्लाह

---

[1]यो नराम्रो कुरो पनि यद्यपि अल्लाहकै इच्छाले हुन्छ । जस्तो कि, "प्रत्येक विषय अल्लाहको तर्फबाट छ" बाट स्पष्ट हुन्छ, तर यो नराम्रो कुनै पापको परिणामस्वरूप हुन्छ । यसकारण आदेश भयो कि यो तिम्रो आफ्नो स्वयंको कर्म हो अर्थात् तिम्रा गल्तीहरु, आलस्य तथा पापको परिणाम । जुनप्रकार कुरआ़नमा आदेश छ :

﴿وَمَا أَصَٰبَكُم مِّن مُّصِيبَةٍ فَبِمَا كَسَبَتْ أَيْدِيكُمْ وَيَعْفُوا۟ عَن كَثِيرٍ﴾

"तिमीलाई जुन कठिनाई पुग्दछ, त्यो तिम्रो आफ्नै कर्महरुको फल हो र धेरैजसो पाप त क्षमा नै गरिदिन्छ ।" (अश्शूरा-३०)

[2]यी अवसरवादी तपाईंको समीप जुन कुरा व्यक्त गर्दछन्, रातहरुमा यसको विपरीत कुरा गर्दछन् र षड्यन्त्र रच्ने गर्दछन् । तपाईं सल्लल्लाहु अलैहि वसल्लम उनीबाट बच्नुहोस् र अल्लाहमा भरोसा गर्नुहोस् । यिनका षड्यन्त्र तपाईंलाई हानि पुऱ्याउन सक्दैनन् किनभने तपाईंको रक्षक तथा कामहरू बनाउनेवाला अल्लाह छ ।

तआ़लामा भरोसा गर्नुस, अल्लाह तआ़ला पर्याप्त ब्यवस्थापक छ ।

أَفَلَا يَتَدَبَّرُونَ الْقُرْآنَ ۚ وَلَوْ كَانَ مِنْ عِنْدِ غَيْرِ اللَّهِ لَوَجَدُوا فِيهِ اخْتِلَافًا كَثِيرًا ﴿٨٢﴾

(८२) के यिनीहरू कुरआ़नमा विचार गर्दैनन् ? यदि यो अल्लाह (तआ़ला) को अतिरिक्त कुनै अन्यको तर्फबाट भएको भए अवश्य यसमा धेरै विभिन्नता पाउँथे ।[1]

وَإِذَا جَاءَهُمْ أَمْرٌ مِنَ الْأَمْنِ أَوِ الْخَوْفِ أَذَاعُوا بِهِ ۖ وَلَوْ رَدُّوهُ إِلَى الرَّسُولِ وَإِلَىٰ أُولِي الْأَمْرِ مِنْهُمْ لَعَلِمَهُ الَّذِينَ يَسْتَنْبِطُونَهُ مِنْهُمْ ۗ وَلَوْلَا فَضْلُ اللَّهِ عَلَيْكُمْ

(८३) र जब उनलाई कुनै शान्ति अथवा भयको सूचना प्राप्त हुन्छ त उनीहरूले त्यसको प्रचार गर्न प्रारम्भ गर्न थाल्छन्, यद्यपि यी मानिसहरू त्यसलाई (रसूल सल्लल्लाहु अलैहि वसल्लम) तथा आफूमध्ये यस्ता कुराको स्रोतसम्म पुग्नेलाई दिएको भए, यसको वास्तविकता तिनीहरू ज्ञात गर्ने थिए जो

[1]कुर्आ़न करीम मार्गदर्शन ग्रहण गर्नको लागि त्यसमा विचार गर्ने कुरोमा दिइराखिएको छ र त्यसको सत्यता जाँच्नलाई एउटा स्तर पनि भनिदैछ कि यदि यो कुनै पुरुषद्वारा लेखिएको भए (जस्तो कि काफिरहरूको विचार छ) त यसको विषय तथा वर्णित घटनाहरुमा टकराव तथा मतभेद हुन्थ्यो, किनभने यो एउटा सानो पुस्तक होइन । एक स्थूल र विस्तृत किताब हो, जसको प्रत्येक भाग चमत्कार तथा साहित्यमा अनुपम छ । जबकि मानवद्वारा रचित स्थूल पुस्तकमा भाषाको स्तर र त्यसको कोमलता तथा सरलता स्थिर रहँदैन । अर्को कुरो के हो भने यसमा पूर्वका समुदायहरुका घटनाको वर्णन छ, जसलाई केवल अल्लाह परोक्षज्ञको अतिरिक्त अन्य कोही पनि वर्णन गर्न सक्दैन । तेस्रो यिनका बयान तथा कथाहरुमा न आपसी विभेद छ र न उनको सानोभन्दा सानो अंश पनि कुर्आ़नको कुनै वास्तविकतासँग टकराउँदछ । यदि एउटा मनुष्य विगतको घटनाहरुको वर्णन गर्दछ भने त्यसको श्रृङ्खलाका कडिहरु टुट्छन् र तिनको विवरणमा विपरीतता उत्पन्न भईनैहाल्थ्यो । कुर्आ़न करीमको यी सबै मानवीय दोषहरुबाट स्वच्छ हुनुको स्पष्ट अर्थ यो हो कि यो वास्तवमा अल्लाहको कथन हो, जुन त्यसका फरिश्ताहरूद्वारा आफ्ना अन्तिम सन्देशवाहक परम आदरणीय मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लममाथि अवतरित गऱ्यो ।

وَرَحْمَتُهُ لَاتَّبَعْتُمُ الشَّيْطٰنَ إِلَّا قَلِيْلًا ﴿٨٣﴾

अनुसन्धानको बृद्धि राख्दछन् ।[1] र यदि अल्लाह (तआ़ला) को कृपा र त्यसको दया तिमीमाथि नभएको भए, त केही व्यक्तिहरूका अतिरिक्त तिमी सबै शैतानका अनुयायी बन्ने थियौ ।

فَقَاتِلْ فِيْ سَبِيْلِ اللّٰهِ ۚ لَا تُكَلَّفُ إِلَّا نَفْسَكَ وَحَرِّضِ الْمُؤْمِنِيْنَ ۚ عَسَى اللّٰهُ أَنْ يَّكُفَّ بَأْسَ الَّذِيْنَ كَفَرُوْا ۭ وَاللّٰهُ أَشَدُّ بَأْسًا وَّأَشَدُّ تَنْكِيْلًا ﴿٨٤﴾

(८४) तिमी अल्लाह तआ़लाको मार्गमा धर्मयुद्ध गरिराख, तिमीलाई मात्र आफ्नै जिम्मेवारी छ र, ईमान भएकालाई आकर्षित गरिराख, अतिसम्भव छ कि अल्लाह (तआ़ला) काफ़िरहरूको आक्रमणलाई रोकिदेओस् । र अल्लाह (तआ़ला) अत्याधिक शक्तिशाली छ एवं दण्ड दिनमा पनि अति कठोर छ ।

مَنْ يَّشْفَعْ شَفَاعَةً حَسَنَةً يَّكُنْ لَّهُ نَصِيْبٌ مِّنْهَا ۚ وَمَنْ يَّشْفَعْ شَفَاعَةً

(८५) जो व्यक्ति कुनै पुण्य तथा राम्रो काम गर्न सिफारिश गर्दछ, उसलाई पनि त्यसको केही भाग प्राप्त हुनेछ र जो नराम्रो तथा कुकर्म गर्ने कुराको

[1]यो केही निर्बल तथा व्यग्र मुसलमानहरूको आचरण उनको सुधारको लागि वर्णित गरिंदैछ । शान्तिको सूचनासित तात्पर्य मुसलमानहरूको सफलता एवं शत्रुको विनाश तथा पराजयको सूचना हो । जुन सुनेर शान्तिको लहर चलिहाल्छ र जसको कारण कैयौं पटक आवश्यकताभन्दा बढी भरोसा उत्पन्न हुन्छ जुन हानिको कारण बन्नसक्छ र भयको सूचनासित तात्पर्य मुसलमानहरूको पराजय र उनको हत्या तथा हानिको सूचना हो (जसबाट मुसलमानहरूमा निराशा फैलनु तथा साहसहीनताको सम्भावना छ) यसकारण उनीहरूसित भनिंदैछ कि यसप्रकारको सूचना चाहे शान्तिको होस् अथवा भयको त्यसलाई सुनेर जनमानसमा फैलाउनुको सट्टा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसम्म पुर्‍याइदेउ, अथवा ज्ञानी र जो सोधकर्ताहरू छन् उनीहरूलाई पुर्‍याइदेउ ताकि उनीहरू विचार गरून् कि यो सूचना सही छ अथवा गलत । यदि सही छ भने त्यसबेला त्यससित मुसलमानहरूलाई अवगत हुनु लाभकारी छ अथवा अनभिज्ञ रहनु लाभकारी छ ? त्यसो त यो नियम सामान्य अवस्थाको लागि पनि बडो महत्वपूर्ण तथा लाभकारी छ । परन्तु युद्धकालमा त यसको विशेषता र आवश्यकता अझ अधिक भईहाल्छ ।

سَيِّئَةً يَكُنْ لَّهُ كِفْلٌ مِّنْهَا ؕ وَكَانَ اللّٰهُ عَلٰى كُلِّ شَيْءٍ مُّقِيْتًا ﴿٨٥﴾

सिफारिश गर्दछ, त्यसकारण त्यसको बोझ त्यस माथि पर्ने छ र अल्लाह (तआ़ला) प्रत्येक वस्तुमाथि सामर्थ्यवान छ ।

وَاِذَا حُيِّيْتُمْ بِتَحِيَّةٍ فَحَيُّوْا بِاَحْسَنَ مِنْهَآ اَوْ رُدُّوْهَا ؕ اِنَّ اللّٰهَ كَانَ عَلٰى كُلِّ شَيْءٍ حَسِيْبًا ﴿٨٦﴾

(८६) र जब तिमीलाई सलाम (अभिवादन) गरिन्छ त त्यसभन्दा राम्रो उत्तर देउ अथवा तिनै शब्दलाई फर्काइदेउ ।[1] निःसन्देह अल्लाह (तआ़ला) हरेक कुराको हिसाब लिनेछ ।

اَللّٰهُ لَآ اِلٰهَ اِلَّا هُوَ ؕ لَيَجْمَعَنَّكُمْ اِلٰى يَوْمِ الْقِيٰمَةِ لَا رَيْبَ فِيْهِ ؕ وَمَنْ اَصْدَقُ مِنَ اللّٰهِ حَدِيْثًا ﴿٨٧﴾

(८७) अल्लाह त्यो हो, जसको अतिरिक्त अन्य कोही (सत्य) पूज्य छैन, त्यसले तिमी सबैलाई अवश्य केयामतका दिन एकत्रित गर्नेछ, जसको (आगमन) मा कुनै शंका छैन, अल्लाह (तआ़ला) का भन्दा अधिक सत्य कसको कुरा हुनेछ ।

---

[1] تحية वास्तवमा تحيية हो । يا को يا मा सन्धि पश्चात تحية भइहाल्यो । यसको अर्थ दीर्घ आयुको आशिर्वाद हो, यहाँ यो सलाम गर्नुको अर्थमा छ । (फ़तहुल क़दीर) धेरै राम्रो उत्तर दिनुको व्याख्या हदीसमा यसप्रकार गरिएको छ कि "अस्सलामु अलैकुम" को उत्तरमा "वरहमतुल्लाह" को अधिकता र "अस्सलामु अलैकूम व रहमतुल्लाह" को उत्तरमा "व बर्कातुहू" को अधिकता गरिहालियोस् । परन्तु यदि कोही "अस्सलामु अलैकुम व रहमतुल्लाह व बर्कातुहू" भन्छ भने केही नथपिकन तिनै शब्दमा उत्तर दिइओस् । (इब्ने कसीर) र हदीसमा छ कि मात्र "अस्सलामु अलैकुम" भन्नुवाट दस पुण्य, त्यसको साथ "व रहमतुल्लाह" भन्नाले बीस पुण्य र व बरकातूहु" भन्नाले तीस पुण्य प्राप्त हुन्छन् । (मुसनद अहमद भाग ४, पृष्ठ ४३९ तथा ४४०) ध्यान रहोस् कि यो आदेश मुसलमानहरूको लागि छ, अर्थात् एक मुसलमान जब अर्को मुसलमानलाई सलाम गर्दछ । शरणार्थी अर्थात् यहूदी तथा इसाईहरूलाई सलाम गर्नुछ भने एक त उनलाई सलाम गर्नुमा पहल नगरियोस् । अर्को कुरा बढोत्तरी नगरियोस् बरु केवल "व अलैकुम" भनेर उत्तर दिइयोस् । (सहीह बुख़ारी, किताबुल इस्तिज़ान, मुस्लिम, किताबुस्सलाम)

(८८) तिमीहरूलाई के भएको छ कि अवसरवादीहरूको विषयमा दुई गुट भइराखेका छौ ?[१] उनीहरूलाई त उनका कर्मका कारण अल्लाह (महान) ले उल्टो फर्काइदिएको छ ।[२] अब के तिमी यो चाहन्छौ कि त्यसलाई बाटो देखाउ, जसलाई अल्लाहले मार्ग-विचलित गरिदिएको छ, त जसलाई अल्लाह मार्ग-विचलित गर्दछ तिमी कदापि त्यसको लागि कुनै मार्ग पाउने छैनौ ।[३]

فَمَا لَكُمْ فِي الْمُنَافِقِينَ فِئَتَيْنِ وَاللَّهُ أَرْكَسَهُم بِمَا كَسَبُوا ۚ أَتُرِيدُونَ أَن تَهْدُوا مَنْ أَضَلَّ اللَّهُ ۖ وَمَن يُضْلِلِ اللَّهُ فَلَن تَجِدَ لَهُ سَبِيلًا ﴿٨٨﴾

(८९) उनीहरू इच्छा गर्दछन् कि जस्तो काफ़िर (अस्वीकार) उनीहरू छन्, तिमी पनि उनैको समान ईमानको इन्कार गर्नथाल तथा तिमी सबै समान बन, अत: उनीहरूमध्ये कसैलाई वास्तविक मित्र नबनाउ[४] जबसम्म उनी अल्लाहको मार्गमा हिज़रत (प्रवास) गर्दैनन्, अनि यदि (यसवाट) मुख फर्काउँछन् भने

وَدُّوا لَوْ تَكْفُرُونَ كَمَا كَفَرُوا فَتَكُونُونَ سَوَاءً ۖ فَلَا تَتَّخِذُوا مِنْهُمْ أَوْلِيَاءَ حَتَّىٰ يُهَاجِرُوا فِي سَبِيلِ اللَّهِ ۚ فَإِن تَوَلَّوْا فَخُذُوهُمْ وَاقْتُلُوهُمْ حَيْثُ وَجَدتُّمُوهُمْ ص

[१]यो प्रश्न इन्कारको लागि छ अर्थात् तिमीहरूबीच यी अवसरवादीहरूको विषयमा मतभेद हुनुहुँदैन । यी अवसरवादीहरूसित तात्पर्य ती मानिसहरू हुन्, जो उहुदका युद्धका समय मदीना शहरको बाहिर केही टाढा गए पश्चात फर्किहालेका थिए कि हाम्रो कुरा मानिएन । (सहीह वखारी तफ़सीर सूर: अन-निसा, सहीह मुस्लिम कितावुल मुनाफ़िकीन) जस्तो कि यसको बारेमा विस्तारले अघि गुज्रिसकेको छ । यी अवसरवादीहरूका लागि मुसलमानहरू दुई गुटमा विभाजित भइहालेका थिए । एक समूहको भनाई थियो कि यी अवसरवादीहरूसित हामी अझै निम्टनु पर्छ, दोस्रो समूहले यसलाई अवसर तथा परिस्थितिको विपरीत ठान्दथ्यो ।

[२]كسبوا (कर्म) सित तात्पर्य रसूलको विरोध तथा धर्मयुद्धबाट मुख फर्काउनु हो । أركسهم उल्टो फर्काइदियो अर्थात् जुन अविश्वास र विपदाबाट उम्केका थिए, त्यसैमा लगेर अल्झाइदियो अथवा यसको कारण नष्ट गरिदियो ।

[३]जसलाई अल्लाह पथ-विचलित गर्दछ अर्थात् निरन्तर अधर्म तथा कटुताको कारण उनका हृदयमा छाप हानिदिन्छ, उनलाई कोही मार्गमा लैजान सक्दैन ।

[४]हिज़रत (इस्लामको लागि देश त्याग) यस कुराको प्रमाण हो कि अब यिनी शुद्ध मुसलमान बनिसकेका छन् । यस अवस्थामा मित्रता तथा प्रेम उचित हुनेछ ।

وَلَا تَتَّخِذُوْا مِنْهُمْ وَلِيًّا وَّلَا نَصِيْرًا ۙ﴿٨٩﴾

उनीहरूलाई समात[1] तथा हत्या गर जहाँ फेला पाछौं । सावधान ! उनीहरूमध्ये कसैलाई मित्र एवं सहायक नठान ।

اِلَّا الَّذِيْنَ يَصِلُوْنَ اِلٰى قَوْمٍ بَيْنَكُمْ وَبَيْنَهُمْ مِّيْثَاقٌ اَوْ جَآءُوْكُمْ حَصِرَتْ صُدُوْرُهُمْ اَنْ يُّقَاتِلُوْكُمْ اَوْ يُقَاتِلُوْا قَوْمَهُمْ ؕ وَلَوْ شَآءَ اللّٰهُ لَسَلَّطَهُمْ عَلَيْكُمْ فَلَقٰتَلُوْكُمْ ۚ فَاِنِ اعْتَزَلُوْكُمْ فَلَمْ يُقَاتِلُوْكُمْ وَاَلْقَوْا اِلَيْكُمُ السَّلَمَ ۙ فَمَا

(९०) तर जो त्यस समुदायसँग सम्बन्ध राख्दछन्, जोसँग तिम्रो सन्धि भइसकेको छ अथवा तिम्रो पासमा आउँछन् जब उनका हृदय संकुचित भइराखेका हुन्छन् कि तिमीसित युद्ध गरुन्,[2] तथा आफ्नो समुदायसित लडून्, र यदि अल्लाहले चाहेको भए उनीहरूलाई तिमीमाथि शक्ति प्रदान गर्न सक्थ्यौ तथा उनी अवश्य तिमीसित युद्ध गर्थे[3] त यदि उनी तिमीबाट अलग रहन्छन् र युद्ध गर्दैनन् र तिमीतिर शान्तिको सन्देश प्रस्तुत[4]

[1]अर्थात् जब तिमीलाई उनीमाथि वश तथा अधिकार प्राप्त हुन्छ ।

[2]अर्थात् जोसित युद्ध आदेश दिइराखिएको छ, यसबाट दुई प्रकारका मानिसहरू अलग छन् । एउटा ती मानिसहरू, जो यस्ता समुदायसँग सम्बन्ध राख्दछन् अर्थात् यस्तो समुदायका मानिस हुन् अथवा त्यसको शरणमा छन्, जुन समुदायसँग तिम्रो सन्धि छ । दोस्रो ती हुन् जो तिम्रो पासमा यस अवस्थामा आउँछन् कि आफ्नो समुदायसित युद्ध गर्नुवाट तर्कन्छन् । अर्थात् तिम्रो पक्षमा युद्ध गर्न रुचाउँछन् र न तिम्रो विपक्षमा ।

[3]अर्थात् अल्लाहको यो उपकार हो कि उनीहरूलाई युद्धबाट अलग गरिदियो अन्यथा यदि अल्लाह तआला उनीहरूको हृदयमा पनि आफ्नो समुदायको पक्षमा युद्ध गर्नुको विचार उत्पन्न गरिदिन्थ्यो, भने अवश्य उनी पनि तिमीसित लड्थे, यसकारण यदि वास्तवमा यिनीहरू युद्धबाट अलग रहन्छन्, भने तिमी पनि यिनको विरोधमा कुनै प्रगति नगर ।

[4]अलग रहून्, युद्ध नगरून्, तिमीतिर सन्धिका हात बढाउन, सबैको भावार्थ एउटै हो । स्पष्टीकरण तथा विवरणको लागि यी तीन शब्द प्रयोग गरिएका हुन् ताकि मुसलमान उनको विषयमा सावधान रहून्, किनभने जो युद्ध तथा घटनाभन्दा पहिला नै अलग भइहालेका छन् र उनको यो अलग हुनु मुसलमानहरूको पक्षमा लाभकारी पनि छ । यसैकारण अल्लाह तआलाले यसलाई उपकारको रूपमा वर्णन गरेको छ तसर्थ उनको विषयमा छेडछाडको उपाय अथवा असावधानीको कार्य उनीभित्र पनि विरोध तथा लडाईंको भावना जागृत गर्नसक्छ,

جْعَلَ اللّٰهُ لَكُمْ عَلَيْهِمْ سَبِيْلًا ﴿٩٠﴾

गर्दछन्, भने अल्लाहले तिम्रो लागि उनका विरुद्ध कुनै युद्धको मार्ग बनाएको छैन ।

سَتَجِدُوْنَ اٰخَرِيْنَ يُرِيْدُوْنَ اَنْ يَّاْمَنُوْكُمْ وَ يَاْمَنُوْا قَوْمَهُمْ ؕ كُلَّمَا رُدُّوْٓا اِلَى الْفِتْنَةِ اُرْكِسُوْا فِيْهَا ۚ فَاِنْ لَّمْ يَعْتَزِلُوْكُمْ وَيُلْقُوْٓا اِلَيْكُمُ السَّلَمَ وَيَكُفُّوْٓا اَيْدِيَهُمْ فَخُذُوْهُمْ وَاقْتُلُوْهُمْ حَيْثُ ثَقِفْتُمُوْهُمْ ؕ

(९१) तिमी केही अन्यलाई पाउनेछौ जो तिमीबाट तथा आफ्नो वर्गबाट सुरक्षित[1] रहन चाहन्छन्, तथा जहिले पनि उनीहरू उपद्रव[2] तिर फर्काइन्छन् त त्यसैमा गई खस्छन्, यदि उनीहरू तिमीबाट अलग रहँदैनन् तथा तिमीसित सन्धि गर्दैनन्, र आफ्ना हात रोक्दैनन्[3] भने तिमी तिनलाई समात

जुन मुसलमानहरूको लागि हानिकारक छ । यसकारण जबसम्म उनीहरू वर्णित अवस्थामा स्थिर रहन्छन्, उनीसित युद्ध नगर । जसको उदाहरण त्यस गुटबाट छ जसको सम्बन्ध बनी हाशिमसित थियो, यिनीहरू बद्रको युद्धका दिन मक्काका मूर्तिपूजकहरूसँग युद्धस्थलमा त आए परन्तु यिनी उनीहरूको साथमा सम्मिलित भई मुसलमानहरूसित युद्ध गर्न चाहँदैनथे । जस्तै आदरणीय अब्बास رضی الله عنه (रसूल सल्लल्लाहु अलैहि वसल्लमका काका) आदि, जो अहिलेसम्म मुसलमान भएका थिएनन् । यसकारण देखावटी रूपमा काफिरहरूको क्याम्पमा थिए । यसैकारण नबी सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय अब्बास رضی الله عنهलाई हत्या गर्नबाट रोकिदिनुभयो । र उनलाई बन्दीमात्र बनाइयो । سِلْم यहाँ مسالمة अर्थात् सन्धिको अर्थमा छ ।

[1]यो एउटा तेस्रो समूहको वर्णन हो, जो अवसरवादी थियो । यिनी मुसलमानहरूको पासमा जाँदा इस्लामको प्रदर्शन गर्थे, ताकि मुसलमानहरूबाट सुरक्षित रहून् । आफ्नो जातिका मानिसहरूको पासमा जाँदा शिर्क तथा मूर्तिपूजा गर्दथे, ताकि उनीहरूले उनलाई आफ्नै धर्मका अनुयायी ठानून् र यसप्रकार दुबैबाट लाभ प्राप्त गर्न सकून् ।

[2]उपद्रवसित तात्पर्य मिश्रणबाद पनि हुनसक्छ । أُركسوا فيها त्यसै शिर्कमा फर्काइन्थे । अथवा उपद्रवबाट तात्पर्य लडाईं हो कि जब उनी मुसलमानहरूसित लडाईंको निम्ति बोलाइन्थ्यो अथवा फर्काइन्थ्यो, त उनी त्यसमा तयार भईहाल्दछन् ।

[3]يلقوا र يكفوا को सम्बन्ध يعتزلوكم सित छ अर्थात सबै नकारात्मक अर्थमा छन्, لم (नकार) लाग्नेछ ।

وَأُولَٰئِكُمْ جَعَلْنَا لَكُمْ عَلَيْهِمْ سُلْطَٰنًا مُّبِينًا ﴿٩١﴾

र जहाँ फेला पर्छन् मारिदेउ, यी नै ती मानिसहरू हुन्, जसमाथि हामीले खुला तर्क दिएका छौं ।[1]

وَمَا كَانَ لِمُؤْمِنٍ أَن يَقْتُلَ مُؤْمِنًا إِلَّا خَطَـًٔا ۚ وَمَن قَتَلَ مُؤْمِنًا خَطَـًٔا فَتَحْرِيرُ رَقَبَةٍ مُّؤْمِنَةٍ وَدِيَةٌ مُّسَلَّمَةٌ إِلَىٰٓ أَهْلِهِۦٓ إِلَّآ أَن يَصَّدَّقُوا۟ ۚ فَإِن كَانَ مِن قَوْمٍ عَدُوٍّ لَّكُمْ وَهُوَ مُؤْمِنٌ

(९२) कुनै मुसलमानको लागि उचित छैन कि कुनै मुसलमानको हत्या गरोस्, परन्तु भुलले[2] हुन्छ (भने अर्कै कुरा हो) र जुन व्यक्ति कुनै मुसलमानको हत्या भुलले गर्दछ[3] भने उसले एक मुसलमान दास (अथवा दासी) मुक्त गर्नु र मारिएका सम्बन्धिहरूलाई हत्याको मूल्य तिर्नुपर्ने छ ।[4] तर यो अर्कै

[1]यस कुरामा कि वास्तवमा तिनको हृदयमा द्वयवाद तथा तिनका मनहरुमा तिमीप्रति ईर्ष्या तथा कटुता छ । त्यसैले त उनी अलिकति प्रयासले पुनः उपद्रव (मिश्रणवाद अथवा तिम्रो विरुद्ध युद्ध गर्न तयार हुनु) मा लिप्त भइहाले ।

[2]यो नकार निषेधको अर्थहरुमा छ जुन निषेध अभियाचक छ अर्थात् एक मुसलमानको लागि अर्को मुसलमानको हत्या गर्नु निषेध तथा अवैध छ । जस्तै

﴿وَمَا كَانَ لَكُمْ أَن تُؤْذُوا رَسُولَ اللَّهِ﴾

"तिम्रो योग्य छैन कि तिमी अल्लाहका रसूल (सल्लल्लाहु अलैहि वसल्लम) लाई कष्ट पुऱ्याउ ।" (अल-अहजाब-५३) अर्थात् हराम छ ।

[3]गल्तीको कारण तथा परिस्थितिहरु कैयन् हुनसक्छन् । उद्देश्य छ कि विचार तथा इरादा हत्या गर्नुको नहोस् । परन्तु कुनै कारणवश हत्या भइहालोस् ।

[4]यो गल्तीले हत्याको अपराधको दण्डको वर्णन भइराखेको छ, जुन दुई रूपमा छ । एक प्रायश्चित एवं क्षमा-याचनाको रूपमा छ । अर्थात् एक मुसलमान दासलाई स्वतन्त्र गर्नु तथा दोस्रो मानव अधिकारको रूपमा छ । र त्यो हो देअत (रक्तको मूल्य) मृतकको रक्तको बदलामा मृतकका उत्तराधिकारीहरूलाई जे-जति पनि दिइयोस्, त्यो देअत हो । र दीअतको मात्रा हदीसहरूको आधारमा सय ऊँट अथवा त्यसको समतुल्य नगद, स्वर्ण, चाँदी अथवा मुद्राको रूपमा हुनेछ ।

**टिप्पणी :** ध्यान रहोस् कि जानी-जानी हत्या गरेकोमा हत्याको बदला हत्या नै छ (जसलाई क़सास भन्दछन्) अथवा दण्डको रूपमा देयत छ । र दण्ड स्वरुप दीयतको सीमा ऊँट छ, जुन आयु तथा स्वास्थ्यको अनुसार तीन प्रकारको हुनुपर्छ जबकि भूलचूकमा हत्या हुनुबाट केवल देयत छ, प्रतिहत्या होइन । यस दीयतमा मात्र सय ऊँट छन् परन्तु स्तर यति कडा छैन ।

فَتَحْرِيْرُ رَقَبَةٍ مُّؤْمِنَةٍ ۭ وَاِنْ كَانَ مِنْ قَوْمٍ بَيْنَكُمْ وَبَيْنَهُمْ مِّيْثَاقٌ فَدِيَةٌ مُّسَلَّمَةٌ اِلٰٓى اَهْلِهٖ وَتَحْرِيْرُ رَقَبَةٍ مُّؤْمِنَةٍ ۚ فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ شَهْرَيْنِ مُتَتَابِعَيْنِ ۡ تَوْبَةً مِّنَ اللّٰهِ ۭ

कुरा हो कि उनी क्षमा गरिदिन्छन्,[1] र यदि त्यो हत्या तिम्रो शत्रुवर्गबाट हुन्छ र मुसलमान छ भने एक मुसलमान दास मुक्त गर्नु आवश्यक छ,[2] र यदि हत्या गरिएको मानिस त्यस समुदायबाट छ, जसको तथा तिम्रो (मुसलमानहरू) बीच सन्धि छ त रक्तको मुल्य त्यसका सम्बन्धिहरूलाई तिर्नुपर्ने छ र मुसलमान दास मुक्त गर्नु पनि छ,[3] र जसलाई उपलब्ध छैन उसले दुई

यसको अतिरिक्त यसको मूल्य सुनन अबू दाऊदको हदीसमा आठ सय दीनार अथवा आठ हजार दिरहम र तिर्मिजीको कथनानुसार बाह्र हजार दिरहम भनिएको छ । यसैप्रकार आदरणीय उमर رضى الله عنه ले आफ्नो शासनकालमा दीयतको मूल्यमा कमी तथा अधिकता तथा विभिन्न व्यवसायवालाहरूलाई अनुकूल पर्ने तिनका विभिन्न मूल्य राख्नु भएको थियो । (इरवाउल ग़लील भाग: ८) (सय ऊँट जति) आधारमा त्यसको मूल्य हर कालमा त्यसको मूल्य अनुसार निर्धारित गरिनेछ । (विस्तृत जानकारीको लागि धार्मिक नियम, हदीस तथा विद्वानिहरूका पुस्तक हेर्नुस्)

[1]क्षमा गरिदिनुलाई दानको रूपमा वर्णन गर्नुको उद्देश्य क्षमा गर्नुको प्रलोभन दिनु हो ।

[2]अर्थात् यस अवस्थामा दीयत हुनेछैन । यसको कारण केहीले यसप्रकार वर्णन गरेका छन् कि किनभने त्यसका सम्बन्धि शत्रुताको आधारमा लड्नेवाला काफ़िर हुन्, यसकारण उनी मुसलमानको दीयत लिनुका अधिकारी छैनन् । केहीले यो कारणवाट वर्णित गरेका छन् कि यस मुसलमानले इस्लाम धर्म स्वीकार गरे पश्चात हिज्रत गरेन जबकि त्यसबेला हिज्रतमा बडो जोड दिइएको थियो । यस आलस्यको कारण त्यसको रगतको निषेधता कम छ । (फ़तहुल क़दीर)

[3]यो एउटा तेस्रो अवस्था हो । यसमा पनि त्यो दण्ड तथा दीयत छ जुन पहिलो अवस्थामा छ । केहीले भने यदि हत्या संरक्षणमा छ, त त्यसको दीयत मुसलमानको दीयतको आधा हुनेछ किनभने हदीसमा काफ़िरको देयत मुसलमानको देयतभन्दा आधा वर्णन गरिएको छ । (इरवाउल ग़लील भाग ४, पृष्ठ ३०) तर अधिक उचित कुरो यो प्रतीत हुन्छ कि यस तेस्रो अवस्थामा पनि मारिएको मुसलमानकै आदेश वर्णन गरिदैछ ।

وَكَانَ اللَّهُ عَلِيمًا حَكِيمًا ﴿٩٢﴾

महिना लगातार रोजा (ब्रत) बस्नुपर्ने छ[1] अल्लाहसित क्षमा गराउनको लागि, तथा अल्लाह ज्ञानी, विवेकशील छ ।

وَمَن يَقْتُلْ مُؤْمِنًا مُّتَعَمِّدًا فَجَزَآؤُهُۥ جَهَنَّمُ خَـٰلِدًا فِيهَا وَغَضِبَ اللَّهُ عَلَيْهِ وَلَعَنَهُۥ وَأَعَدَّ لَهُۥ عَذَابًا عَظِيمًا ﴿٩٣﴾

(९३) र जो कोही कुनै मुसलमानको जानी-जानी हत्या गर्दछ, त्यसको दण्ड नरक छ, जसमा त्यो सधैं रहने छ, त्यसमाथि अल्लाह (तआला) को क्रोध छ ।[2] त्यसलाई अल्लाह (तआला) ले धिक्कारेको छ, र त्यसको लागि साह्रै ठूलो यातना तयार गरेको छ ।[3]

[1]अर्थात् यदि दास स्वतन्त्र गर्ने शक्ति छैन भने, पहिलो अवस्था तथा यस अन्तिम अवस्थामा देयतका साथ निरन्तर (विना अन्तर) दुई महिना व्रत छन्, यदि मध्येमा अन्तर भइहाल्यो भने पुन: प्रारम्भबाटै व्रत बस्नुपर्ने आवश्यक हुनेछ । परन्तु धार्मिक कारणहरुवाट अन्तर परिहालेमा शुरुदेखि व्रत बस्नुको आवश्यकता छैन । जस्तै मासिक धर्म, प्रसव रक्त अथवा कठिन रोगको कारण व्रत बस्नुमा वाधक होस्, यात्रालाई धार्मिक कारण मान्नुमा मतभेद छ । (इब्ने कसीर)

[2]यो जानी-जानी गरिएको हत्याको दण्ड हो । हत्या तीन प्रकारको हुन्छ : (१) अन्जानमा हत्या (जसको वर्णन यस आयतको पूर्व आयतमा छ । (२) शंका निश्चयपूर्वक हत्याको समान (जुन हदीसबाट सिद्ध छ) (३) जानी-जानी हत्या, जसको अर्थ छ कसैको निश्चितपूर्वक हत्या गरिएको होस्, र यसको लागि त्यस साधनतन्त्रको प्रयोग गर्नु जसबाट साधारणत: हत्या गरिनेछ, जस्तै तलवार, भाला आदि । यस आयतमा मुसलमानको हत्यामाथि अति कठोर चेतावनी दिइएको छ। जस्तै यसको दण्ड नरक हो, जसमा सधैं रहनुपर्ने छ, यसको अतिरिक्त अल्लाह तआलाको क्रोध र उसको धिक्कार र बडो ठूलो यातना पनि हुनेछ । यति कठोर दण्ड एकै समयमा कुनै अन्य पापमा वर्णित गरिएका छैनन् । जसबाट यो स्पष्ट हुन्छ कि एक मुसलमानको हत्या अल्लाह तआला कहाँ कति घोर अपराध छ । हदीसमा पनि यसको कटुआलोचना तथा यसमा कठोर चेतावनीको वर्णन छ ।

[3]मुसलमानको हत्याराको क्षमा स्वीकार छ अथवा छैन ? केही विद्वान यस अपराधको कठोर दण्डको चेतावनीको आधारमा क्षमा स्वीकार नहुने पक्षमा छन् । परन्तु कुरआन तथा हदीसको अध्ययनबाट यो ज्ञात हुन्छ कि स्वच्छ मनले माँगिएको क्षमाबाट पाप क्षमा हुनसक्दछ । ﴿إِلَّا مَن تَابَ وَءَامَنَ وَعَمِلَ عَمَلًا صَـٰلِحًا﴾ (अल-फुरकान-७०) तथा

(९४) हे ईमानवालाहरू ! जब तिमी अल्लाहको मार्गमा गइराखेका हुन्छौ त राम्ररी जानकारी प्राप्त गर र जो तिमीसित सलाम भन्दछ, तिमी त्यसलाई यो नभन कि तिमी निष्ठावान होइनौ ।[1] तिमी सांसारिक जीवन सामग्रीको खोजीमा छौ भने अल्लाह (तआ़ला) सित धेरै सुख सामग्रीहरु छन् ।[2] पहिला तिमी पनि यस्तो नै थियौ, अनि अल्लाह (तआ़ला) ले तिमीमाथि उपकार

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓاْ إِذَا ضَرَبْتُمْ فِى سَبِيلِ ٱللَّهِ فَتَبَيَّنُواْ وَلَا تَقُولُواْ لِمَنْ أَلْقَىٰٓ إِلَيْكُمُ ٱلسَّلَٰمَ لَسْتَ مُؤْمِنًا تَبْتَغُونَ عَرَضَ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا فَعِندَ ٱللَّهِ مَغَانِمُ كَثِيرَةٌ ۚ كَذَٰلِكَ كُنتُم مِّن قَبْلُ فَمَنَّ ٱللَّهُ عَلَيْكُمْ فَتَبَيَّنُوٓاْ ۚ

अन्य क्षमाका आयतहरु सामान्य छन् । प्रत्येक पाप चाहे सानो होस् वा ठूलो अथवा साह्रै ठूलो, स्वच्छ हृदयले माँगिएको क्षमाद्वारा त्यसको क्षमा सम्भव छ । यहाँ यसको दण्ड नरक जुन भनिएको छ, यसको अर्थ यो हो कि यदि उसले क्षमा माँगेन भने उसको दण्ड नरक हो जो अल्लाह तआ़ला उसको यस अपराधमा दिन सक्छ । यसैप्रकार क्षमा नमाँगेको अवस्थामा नरकमा सधैं रहनुको अर्थ पनि लामो अवधिको लागि हो किनभने नरकमा सधैं रहनुको दण्ड केवल काफ़िर र मूर्तिपूजकहरूको लागि हो । यसको अतिरिक्त हत्याको सम्बन्ध यद्यपि भक्तहरूको अधिकारसित छ, जो क्षमाबाट समाप्त हुँदैनन्, परन्तु अल्लाह तआ़ला आफ्नो कृपाले त्यसको पूर्ति गरी समाप्त गर्न सक्दछ । यसप्रकार हत्या गरिएकोलाई पनि बदला प्राप्त भइहाल्नेछ र हत्याराको पनि क्षमा स्वीकार भइहाल्नेछ । (फ़तहुल क़दीर तथा इब्ने कसीर)

[1]हदीसहरुका अनुसार केही सहावा एक ठाउँबाट गुज्रे जहाँ एउटा गोठालो बाखा चराइराखेको थियो, मुसलमानहरूलाई देखेर गोठालोले सलाम गऱ्यो, केही सहाबाले भन्ठाने कि शायद त्यो आफ्नो प्राण रक्षाको लागि मुसलमान भनिराखेको छ, अत: उनले राम्ररी पत्ता नलगाईकन त्यसको हत्या गरिदिए र बाखाहरु युद्धमा प्राप्त सामग्रीको रुपमा लिएर नवी करीम सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भए, जसपश्चात यो आयत अवतरित भयो । (सहीह बुख़ारी, तिमिजी तफ़सीर सूर: अन-निसा) केही कथनहरुमा यस्तो भनिएको छ कि नवी सल्लल्लाहु अलैहि वसल्लमले यो पनि भन्नुभयो कि मक्कामा तिमी पनि यस गोठालो झैं ईमान लुकाउनमा विवश थियौ । (सहीह बुख़ारी, किताबुल दीयत) (तात्पर्य यो थियो कि उसको हत्याको कुनै औचित्य थिएन)

[2]अर्थात् तिमीलाई केही बाखाहरू प्राप्त भइहाले, यो सब केही पनि होइन । अल्लाह तआ़लासित यसभन्दा कैयन् गुना धेरै श्रेष्ठ पुरस्कार छन्, जुन अल्लाह तथा रसूल सल्लल्लाहु अलैहि वसल्लमको आज्ञापालन गरी तिमीलाई पनि संसारमा प्राप्त हुनसक्दछ, र आख़िरत (परलोक) मा त्यसको प्राप्ति निश्चित नै छ ।

إِنَّ اللّٰهَ كَانَ بِمَا تَعْمَلُوْنَ خَبِيْرًا ﴿٩٤﴾

गऱ्यो, अतएवं तिमी अवश्य जानकारी (छानबिन) गर्नेगर, निःसन्देह अल्लाह (तआला) तिम्रा कर्मलाई राम्ररी जान्दछ ।

لَا يَسْتَوِى الْقٰعِدُوْنَ مِنَ الْمُؤْمِنِيْنَ غَيْرُ اُولِى الضَّرَرِ وَالْمُجٰهِدُوْنَ فِىْ سَبِيْلِ اللّٰهِ بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ ؕ فَضَّلَ اللّٰهُ الْمُجٰهِدِيْنَ بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ عَلَى الْقٰعِدِيْنَ دَرَجَةً ؕ وَكُلًّا وَّعَدَ اللّٰهُ الْحُسْنٰى ؕ وَفَضَّلَ اللّٰهُ الْمُجٰهِدِيْنَ عَلَى الْقٰعِدِيْنَ اَجْرًا عَظِيْمًا ﴿٩٥﴾

(९५) जुन मुसलमान अकारण बसिराख्छन् तथा जो अल्लाहको मार्गमा आफ्ना तन, धनका साथ धर्मयुद्ध गर्दछन्, समान हुने छैनन् ।[१] अल्लाहले उनीहरूलाई जो आफ्ना धन तथा प्राणसँग धर्मयुद्ध गर्दछन्, उनीमाथि जो बसिरहन्छन्, दर्जाहरूमा अधिक प्रधानता दिएको छ तथा त्यसो त प्रत्येकलाई शुभवचन[२] दिएको छ, किन्तु अल्लाहले जो धर्मयुद्ध गर्नेहरू छन् उनलाई बसिरहनेहरूमाथि महाप्रतिकारको प्रधानता दिएको छ ।

[१]जब यो आयत अवतरित भयो कि अल्लाहको मार्गमा धर्मयुद्ध गर्नेवाला तथा घरैमा बसिरहनेवाला समान छैनन् त आदरणीय अब्दुल्लाह बिन उम्मे मक्तूम (अन्धा सहाबी) आदिले निवेदन गरे कि हामी त अपाङ्ग छौं, जसको कारणले हामी धर्मयुद्धमा भाग लिन सक्दैनौं । तात्पर्य यो थियो कि घरमा बसिरहनुको कारण धर्मयुद्धमा भाग लिनेवालाको समान हामी प्रतिफल तथा पुण्य प्राप्त गर्न सक्ने छैनौं, जबकि हामी कुनै आनन्द अथवा ज्यान जोगाउनको भयले घरमा बसिराखेका छैनौं, बरु हाम्रा धार्मिक नियमको आधारमा रुक्नु उचित छ । यसमा अल्लाह तआलाले "अकारण" को अपवाद अवतरित गऱ्यो अर्थात अकारण बसिराख्नेहरू धर्मयोद्धाहरूको समान छैनन् । जसको अर्थ यो भयो कि धार्मिक नियमका आधारमा घरमा बसिरहनेलाई यस आधारमा धर्म-योद्धाहरूको समान प्रतिफल प्राप्त हुनेछ । जस्तो कि हदीसमा छ कि मदीनामा बसिराखेका अपाङ्ग तथा अपाहिज धर्म-योद्धाहरूको साथ बदलामा समान छन् किनभने उनलाई कारणहरूले गर्दा रुक्नु परेको छ । (सहीह बुखारी, किताबुल जिहाद)

[२]अर्थात् तन, मन र धनले धर्मयुद्ध गर्नेहरुलाई जुन स्थान प्राप्त हुनेछ, धर्मयुद्धमा भाग नलिनेवाला यद्यपि यसबाट बञ्चित रहनेछन्, तैपनि अल्लाह तआलाले दुवैलाई भलाईको वचन दिएको छ । यसबाट आलिमहरूले यो अर्थ निकालेका छन् कि सामान्य परिस्थितिहरूमा धर्मयुद्ध अनिवार्य छैन, आवश्यकता अनुसार अनिवार्य छ अर्थात् यदि अवश्यकता अनुसार मानिसहरू धर्मयुद्धमा भाग लिन्छन् भने त्यस क्षेत्रका अन्य मानिसहरूको तर्फबाट अनिवार्यताको पूर्ति बुझिने छ ।

(९६) आफ्नो तर्फबाट दर्जाहरूको पनि तथा क्षमा एवं दया पनि र अल्लाह क्षमाशील कृपालु छ ।

دَرَجٰتٍ مِّنۡهُ وَمَغۡفِرَةً وَّرَحۡمَةً ؕ وَكَانَ اللّٰهُ غَفُوۡرًا رَّحِيۡمًا ۟

(९७) जुन मानिसहरू स्वयं आफूमाथि अत्याचार गर्दछन्, जब फरिश्ताहरू उनका प्राण निकाल्दछन् त भन्दछन् कि तिमी कुन दिशामा थियौ ?[1] उनीहरू भन्दछन् कि हामी धर्तीमा निर्बल थियौं,[2] त प्रश्न गर्दछन् कि के अल्लाहको भूमि विस्तृत थिएन कि तिमी त्यसमा प्रवास गर्दथ्यौ ? यस्तै मानिसहरूको स्थान नरक हो तथा त्यो नराम्रो ठाउँ हो ।

اِنَّ الَّذِيۡنَ تَوَفّٰىهُمُ الۡمَلٰٓئِكَةُ ظَالِمِىۡۤ اَنۡفُسِهِمۡ قَالُوۡا فِيۡمَ كُنۡتُمۡ ؕ قَالُوۡا كُنَّا مُسۡتَضۡعَفِيۡنَ فِى الۡاَرۡضِ ؕ قَالُوۡۤا اَلَمۡ تَكُنۡ اَرۡضُ اللّٰهِ وَاسِعَةً فَتُهَاجِرُوۡا فِيۡهَا ؕ فَاُولٰٓئِكَ مَاۡوٰٮهُمۡ جَهَنَّمُ ؕ وَسَآءَتۡ مَصِيۡرًا ۟

[1]यो आयत ती मानिसहरूको विषयमा अवतरित भयो जो मक्का र त्यसको निकटवर्ती क्षेत्रमा रहन्थे र मुसलमान भइहालेका थिए, तर उनले आफ्ना पूर्वजहरूको देश तथा परिवारलाई छाडेर हिज़रत गर्नलाई महत्व दिएन । जबकि मुसलमानहरूको शक्तिलाई एक स्थानमा एकत्रित गर्नको निम्ति हिजरतको अति जोडदारपूर्वक आदेश दिइसकिएको थियो । यसकारण जसले यस हिज़रतको आदेश पालन गरेनन्, उनीहरूलाई यहाँ अत्याचारी भनिएको छ र उनको स्थान नरक बताइएको छ । जसबाट यो ज्ञात भयो कि परिस्थिति तथा समयका आधारमा इस्लामका केही आदेश कुफ्र अथवा इस्लामका पर्यायवाची बन्न पुग्छन् । जस्तै यस अवसरमा हिज़रत इस्लाम तथा यसको अवहेलना कुफ्रको पर्यायवाची भइहाल्यो । यसबाट यो विदित भयो कि काफ़िरहरूको देशबाट हिज़रत गर्नु अनिवार्य छ, जहाँ इस्लामको शिक्षा अनुसार कार्यरत हुनु कठिन हुन्छ र त्यहाँ रहनु काफ़िरहरूको साहस बृद्धिको कारण बन्दछ ।

[2]यहाँ "स्थान" सित तात्पर्य आयतको अवतरणको विशेषताको आधारमा मक्का र त्यसको समीपवर्ती क्षेत्र हो र अल्लाहको धर्तीसित तात्पर्य मदीना हो । तर आदेशको आधारमा सामान्य धर्ती हो अर्थात् पहिलो स्थान काफ़िरहरूको क्षेत्र हुनेछ, जहाँ इस्लामका शिक्षाका अनुसार कार्य गर्नु कठिन हुन्छ । र मनुष्य अल्लाहको धर्मको पालनाको उद्देश्यले हिज़रत गरेर जान्छन् ।

إِلَّا الْمُسْتَضْعَفِينَ مِنَ الرِّجَالِ وَالنِّسَاءِ وَالْوِلْدَانِ لَا يَسْتَطِيعُونَ حِيلَةً وَلَا يَهْتَدُونَ سَبِيلًا ﴿٩٨﴾

(९८) परन्तु जुन पुरुष तथा स्त्री एवं बालकहरू विवश छन्, जो कुनै उपाय गर्न सक्दैनन् र न मार्ग जान्दछन् ।[1]

فَأُولَٰئِكَ عَسَى اللَّهُ أَنْ يَعْفُوَ عَنْهُمْ ۚ وَكَانَ اللَّهُ عَفُوًّا غَفُورًا ﴿٩٩﴾

(९९) अति सम्भव छ कि अल्लाह (तआला) उनीहरूलाई क्षमा गरिदेओस् र अल्लाह सहिष्णु, क्षमाशील छ ।

وَمَنْ يُهَاجِرْ فِي سَبِيلِ اللَّهِ يَجِدْ فِي الْأَرْضِ مُرَاغَمًا كَثِيرًا وَسَعَةً ۚ وَمَنْ يَخْرُجْ مِنْ بَيْتِهِ مُهَاجِرًا إِلَى اللَّهِ وَرَسُولِهِ ثُمَّ يُدْرِكْهُ الْمَوْتُ فَقَدْ وَقَعَ أَجْرُهُ عَلَى اللَّهِ ۗ وَكَانَ اللَّهُ غَفُورًا رَحِيمًا ﴿١٠٠﴾

(१००) र जो कोही अल्लाहको बाटोमा प्रवास गर्नेछ, त्यो धर्तीमा धेरै निवासस्थान पनि पाउने छ तथा सम्पन्नता पनि ।[2] र जो कोही आफ्नो घरबाट अल्लाह (तआला) तथा त्यसका रसूल (सल्लल्लाहु अलैहि वसल्लम) तिर निस्क्यो र त्यसको मृत्यु भयो भने, तैपनि अवश्य त्यसको फल अल्लाह (तआला) को जिम्मामा हुनेछ ।[3] तथा अल्लाह (तआला) क्षमाशील कृपालु छ ।

[1]यो ती पुरुष-स्त्री तथा वालकहरूलाई यस आदेशवाट अलग गरिएको छ, जो संसाधनवाट बञ्चित तथा जो मार्गसित पनि अन्जान थियो । बालक यद्यपि धार्मिक नियमहरूको पालन गर्नको लागि बाध्य छैन, तर यहाँ उनको वर्णन गरी हिज़रतको विशेषतालाई अझै स्पष्ट गरिएको छ कि बालक पनि हिज़रत गरून् अथवा यहाँ वयस्क आयुका निकट पुग्नेवाला बालक हुनेछन् ।

[2]यसमा हिज़रतको प्रलोभन तथा मूर्तिपूजकहरूबाट अलग रहने कुरोमा जोड दिइराखिएको छ । मुरागमन مراغما को अर्थ स्थान, निवासस्थान अथवा शरणस्थल हो । र सअतन् سعة को अर्थ जीविका स्थान तथा देशहरूको विस्तार तथा धन-धान्यको अधिकता हो ।

[3]यसमा नियत (ध्यान) को आधारमा प्रतिकार तथा पुण्य प्राप्तिको विश्वास दिलाइएको छ चाहे मृत्युको कारण त्यसले त्यस कार्यलाई पूर्ण गर्न नसकेको होस् । जस्तो कि हदीसमा पूर्वका समुदायमा एउटा व्यक्तिद्वारा गरिएका सयवटा हत्याको वर्णन छ, जो क्षमाको लागि सत्कर्मीहरूको वस्तीतिर गईराखेको थियो कि मार्गमै उसको मृत्यु भइहाल्यो । अल्लाह तआलाले सत्कर्मीहरूको वस्ती अन्य वस्तीहरूको अपेक्षा निकटतम् गरिदियो, जसको कारण त्यसलाई दयाका फरिश्ता त्यसलाई आफ्नो साथमा लगे । (सहीह बुख़ारी, किताबुल अम्बिया अध्याय संख्या ५४ र मुस्लिम, किताबुत तौबा बाब कूबूलित्तौ-बतिल क़ातिल व इन कषुर, कत्लुहू)

وَإِذَا ضَرَبْتُمْ فِي الْأَرْضِ فَلَيْسَ عَلَيْكُمْ جُنَاحٌ أَنْ تَقْصُرُوا مِنَ الصَّلَوٰةِ إِنْ خِفْتُمْ أَنْ يَفْتِنَكُمُ الَّذِينَ كَفَرُوا إِنَّ الْكَٰفِرِينَ كَانُوا لَكُمْ عَدُوًّا مُّبِينًا ﴿١٠١﴾

(१०१) र जब धर्तीमा यात्रा गर्छौ त तिमीलाई नमाज़ कस्र गर्नुमा (चार रकअतको नमाज़ दुई रकअत पढ्नुमा कुनै दोष छैन); यदि तिमीलाई यो भय छ कि काफ़िर (विश्वासहीन) तिमीलाई कष्ट दिनेछन्,[1] निःसन्देह विश्वासहीन तिम्रा खुल्ला शत्रु हुन् ।

यसैप्रकार जो व्यक्ति हिज़रतको विचारले घरबाट निस्कन्छ, परन्तु मार्गमै त्यसको मृत्यु भईहाल्छ भने अल्लाह तआलाको तर्फबाट हिज़रतको पुण्य अवश्य पाउनेछ यद्यपि त्यसले हिज़रतको उद्देश्यलाई पूर्ण गर्न सकेन । जस्तो कि हदीसमा पनि छ । नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

(إنما الأعمال بالنيات) (وإنما لكل امرئ ما نوى) (कर्म विचारहरूमा निर्भर हुन्छन्) "मनुष्यको लागि त्यही छ, जसको उसले नियत गऱ्यो ।" जसले अल्लाह र त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लमको लागि हिज़रत गऱ्यो, त त्यसको हिज़रत त्यसैको लागि छ, र जसले संसार प्राप्त गर्न अथवा कुनै स्त्रीसँग विवाह गर्ने उद्देश्यले हिज़रत गऱ्यो भने त्यसको हिज़रत त्यसैको लागि छ, जुन उद्देश्यले उसले हिज़रत गऱ्यो । (सहीह बुख़ारी बाब बदइल वहय, मुस्लिम किताबुल इमारः)

यो आदेश सामान्य हो, जो धर्मको प्रत्येक कार्यमा सम्मिलित छ अर्थात् त्यसलाई गर्दाखेरि अल्लाहको प्रसन्नता ध्यानमा रहन्छ भने त्यो श्रेष्ठता स्वीकार्य हुनेछ अन्यथा रद्द हुनेछ ।

[1]यसमा यात्राको स्थितिमा नमाज़ कस्र गर्नु (चार रकआतवाली नमाज़लाई दुई रकाअतमा नै पढ्नु) को अनुमति प्रदान गरिदैछ । "यदि तिमीलाई भय छ" सामयिक परिस्थितिहरूको आधारमा छ । किनभने त्यसबेला समस्त अरब युद्धक्षेत्र बनेको थियो । कतैतिरको यात्रा खतरामुक्त थिएन । अर्थात् यो प्रतिबन्ध छैन कि यदि मार्गमा भय छ भने कस्रको आज्ञा छ । किनभने कुरआन करीममा अन्य स्थानहरु यसैप्रकारका प्रतिबन्धहरूको वर्णन छ, जुन सामयिक रूपले यस्तो सम्भव हुनसक्छ । जस्तै "तिमी आफ्ना दासीहरूलाई व्यभिचारका लागि बाध्य नगर, यदि उनीहरू यसबाट बच्न चाहन्छन्" किनभने उनी बच्न चाहन्थिन् यसकारण अल्लाह तआलाले वर्णन गऱ्यो अन्यथा यसको तात्पर्य यो कदापि होइन कि यदि उनी तत्पर छन्, त तिम्रो लागि उचित छ कि उनीसित कुकर्म गराईहाल । यसैप्रकार पूर्वमा सूरःआले इमरानको आयत संख्या १३० तथा यसको पश्चात यसै सूरः अन-निसाको आयत संख्या २३ तथा सूरः अन-नूरको आयत संख्या ३३ आदि आयतहरुमा आएको छ । केही सहाबाको विचारमा आयो कि अब त शान्ति

(१०२) र जब तपाईं उनीहरूको माझमा हुनुहुन्छ र युद्धको दशामा उनको लागि नमाज़को स्थापना गर्नु हुन्छ त यो आवश्यक छ कि उनको एक समूह हतियार लिएर उभेको होस्, अनि जब यिनी सजदा (ढोग) गरिसकेको हुन्छन् त यो समूह हटेर तपाईंको पछाडी जाओस् र अर्को समूह जसले नमाज़ पढेको छैन, त्यो आओस् र तपाईंसँग नमाज़ सम्पन्न गरोस् र आफ्नो बचाव गरेको तथा आफ्नो हतियार लिइराखेको होस्, काफ़िर चाहन्छन् कि तपाईं कुनै प्रकारले आफ्नो हतियार तथा आफ्ना सामग्रीहरूबाट असावधान हुने बित्तिकै, उनीहरू तपाईंमाथि एक्कासि आक्रमण गरिदेऊन्।[1] र हो, आफ्नो हतियार झिकेर राख्नुमा

وَإِذَا كُنتَ فِيهِمْ فَأَقَمْتَ لَهُمُ الصَّلَوٰةَ فَلْتَقُمْ طَآئِفَةٌ مِّنْهُم مَّعَكَ وَلْيَأْخُذُوٓا۟ أَسْلِحَتَهُمْ فَإِذَا سَجَدُوا۟ فَلْيَكُونُوا۟ مِن وَرَآئِكُمْ وَلْتَأْتِ طَآئِفَةٌ أُخْرَىٰ لَمْ يُصَلُّوا۟ فَلْيُصَلُّوا۟ مَعَكَ وَلْيَأْخُذُوا۟ حِذْرَهُمْ وَأَسْلِحَتَهُمْ ۗ وَدَّ الَّذِينَ كَفَرُوا۟ لَوْ تَغْفُلُونَ عَنْ أَسْلِحَتِكُمْ وَأَمْتِعَتِكُمْ فَيَمِيلُونَ عَلَيْكُم مَّيْلَةً وَاحِدَةً ۚ وَلَا جُنَاحَ

छ अब यात्रामा क़स्र नमाज़ पढ्नुहुन्न। नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, “यो अल्लाहको तर्फबाट तिमीहरूलाई दान हो, त्यसको दानलाई स्वीकार गर।” (मुसनद अहमद, भाग १ पृष्ठ २५-२६, सहीह मुस्लिम किताबुल मुसाफ़िरीन तथा अन्य हदीसको पुस्तिकाहरुमा)।

**टिप्पणी :** यात्राको दूरी तथा कस्रका दिनहरुको निर्धारणमा मतभेद छ। इमाम शौकानीले तीन फ़रसख़ अर्थात् ९ कोस भनेको कथनलाई प्राथमिकता दिनुभएको छ। (नैलुल औतार, भाग ३, पृष्ठ २२०)। यसैप्रकार अन्य विशेषज्ञहरूको विचार छ कि कुनै स्थानको यात्राको समय तीन वा चार दिनभन्दा अधिक निवास गर्नुको विचार नगरोस् अथवा यदि यसभन्दा अधिक दिन निवास गर्नुको विचार छ भने क़स्र नमाज़ पढ्नुहुन्न। (विस्तारपूर्वक जानकारीको लागि हेर्नुस् मिर्आतुल मफ़ातीह)

[1]यस आयतमा सलातुल ख़ौफ (भयको समयको नमाज़) को आज्ञा, बरु आदेश दिइराखिएको छ। सलातुल ख़ौफको अर्थ हो भयको नमाज़। यो त्यस समयको धार्मिक नियम हो, जब मुसलमान तथा काफ़िरहरूका सेना आमने-सामने युद्धको लागि तयार भई उभिराखेका हुन्छन् तथा एक छिनको पनि उपेक्षा मुसलमानहरूका लागि अत्याधिक हानिकारक सिद्ध हुनसक्छ। यस्तो समयमा यदि नमाज़को समय आईहाल्छ त सलातुल ख़ौफको आदेश छ। यसबारे विभिन्न रुपहरूको वर्णन हदीसमा छ, जस्तै सेना दुई भागहरुमा विभाजित भयो, एक भाग शत्रुको सामना गर्नको लागि उभिरहयो, ताकि काफ़िरहरूलाई आक्रमण गर्न साहस नहोस्,

त्यसबेला तिमीलाई कुनै दोष छैन, जबकि तिमी कष्टमा छौ अथवा वर्षाको कारण अथवा रोग हुनुको कारण (छ) एवं (तैपनि) आफ्नो बचाव सामग्री साथमा लिईराख । नि:सन्देह अल्लाह तआलाले नकार्नेहरूका लागि अपमानको दण्ड तयार गरेको छ ।

عَلَيْكُمْ إِن كَانَ بِكُمْ أَذًى مِّن مَّطَرٍ أَوْ كُنتُم مَّرْضَىٰ أَن تَضَعُوا أَسْلِحَتَكُمْ ۖ وَخُذُوا حِذْرَكُمْ ۗ إِنَّ اللَّهَ أَعَدَّ لِلْكَافِرِينَ عَذَابًا مُّهِينًا ﴿١٠٢﴾

(१०३) अनि जब तिमी नमाज़ पढिसकेका हुन्छौ त उठ्दा तथा बस्दा एवं पल्टेको अवस्थामा अल्लाह (तआ़ला) को वर्णन गर्दैरह[1] र जब शान्ति प्राप्त हुन्छ तब नमाज़ स्थापित गर, अवश्य[2] नमाज़

فَإِذَا قَضَيْتُمُ الصَّلَاةَ فَاذْكُرُوا اللَّهَ قِيَامًا وَقُعُودًا وَعَلَىٰ جُنُوبِكُمْ ۚ فَإِذَا اطْمَأْنَنتُمْ فَأَقِيمُوا الصَّلَاةَ ۚ

र दोस्रो भागले नबी सल्लल्लाहु अलैहि वसल्लमसँग नमाज पढ्यो, जब यो भागले नमाज़ पढिसक्यो त पहिलेको स्थानमा मोर्चा लिनका लागि आई उभ्यो । केही कथनहरुका अनुसार उहाँ सल्लल्लाहु अलैहि वसल्लमले दुवै भागहरुलाई एक-एक रकाअत नमाज़ पढाउनुभयो, यसप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लमका दुई रक़ाअत र शेष सैनिकहरूको एक-एक रक़आत भयो । कुनै-कुनै कथनमा भनिन्छ कि दुई-दुई रक़ाअत पढाउनु भयो, यसप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लमको चार रक़ाअत तथा शेष सैनिकहरूको दुई-दुई रक़ाअत भयो र केही भनाई अनुसार उहाँ एक रक़आत पश्चात तहीयात अवस्थामा जस्तै बसिरहनु भयो, सैनिकहरूले उभेर एक रक़आत अरु पढि दुई रक़ाअत पूरा गरे र शत्रुका समक्ष गई डटिहाले, दोस्रो भागले आएर नबी सल्लल्लाहु अलैहि वसल्लमको पछाडी नमाज़ पढ्यो, उहाँ सल्लल्लाहु अलैहि वसल्लमले उनीहरूलाई पनि एक रक़ाअत नमाज़ पढाउनु भयो र तहीयातमा बस्नुभयो र त्यसबेलासम्म बसिराख्नु भयो जबसम्म सैनिकहरूले दोस्रो रक़ाअत पूरा गरेनन् । अनि उनीसँग उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सलाम फेर्नुभयो । यसप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लमको पनि दुई रक़ाअत तथा सेनाको दुवै भागहरुको पनि दुई रक़ाअत पूरा भयो । (हेर्नुस् हदीसका किताबहरू)

[1]तात्पर्य यही भएको नमाज़ हो, यसमा सुविधा दिएको हुनाले यसको पूर्तिको लागि भनिदैछ कि उभेर, बसेर, पल्टेर अल्लाहको वर्णन गर्दैरह ।

[2]यसको तात्पर्य यो हो कि जब युद्धको अवस्था समाप्त हुन्छ त पुन: नमाज़लाई उसको उसै विधिको अनुसार पढ्नुछ, जो सामान्य अवस्थामा पढिन्छ ।

إِنَّ الصَّلَوٰةَ كَانَتْ عَلَى الْمُؤْمِنِينَ كِتَٰبًا مَّوْقُوتًا ﴿١٠٣﴾

मुसलमानहरूमाथि निश्चित तथा निर्धारित समयमा अनिवार्य गरिएको छ ।[1]

وَلَا تَهِنُوا۟ فِى ٱبْتِغَآءِ ٱلْقَوْمِ ۖ إِن تَكُونُوا۟ تَأْلَمُونَ فَإِنَّهُمْ يَأْلَمُونَ كَمَا تَأْلَمُونَ ۖ وَتَرْجُونَ مِنَ ٱللَّهِ مَا لَا يَرْجُونَ ۗ وَكَانَ ٱللَّهُ عَلِيمًا حَكِيمًا ﴿١٠٤﴾

(१०४) र ती मानिसहरूलाई पछ्याउनबाट आलस्य नगर,[2] यदि तिमीलाई कष्ट हुन्छ भने उनीलाई पनि कष्ट हुन्छ, र तिमी अल्लाह (तआ़ला) बाट ती आशा राख्दछौ जुन उनीहरूलाई छैन,[3] अल्लाह तआ़ला सर्वज्ञ, तत्वदर्शी छ ।

إِنَّآ أَنزَلْنَآ إِلَيْكَ ٱلْكِتَٰبَ بِٱلْحَقِّ لِتَحْكُمَ بَيْنَ ٱلنَّاسِ بِمَآ أَرَىٰكَ ٱللَّهُ ۚ وَلَا تَكُن لِّلْخَآئِنِينَ خَصِيمًا ﴿١٠٥﴾

(१०५) निःसन्देह हामीले तिमीतिर सत्यशास्त्र अवतरित गरेका छौं, ताकि तिमी मानिसहरू बीच त्यस अनुसार न्याय गर जससित अल्लाह (तआ़ला) ले तिमीलाई अवगत गरायो ।[4] र विश्वासघात

[1]यसमा नमाज़लाई निर्धारित समय अनुसार पढ्नेबारे जोड दिइराखिएको छ, जसबाट ज्ञात हुन्छ कि धार्मिक कारणहरुविना दुई नमाज़लाई एकत्रित गर्नु सही छैन, किनभने यसप्रकार कमसेकम एक नमाज़ आफ्नो निर्धारित समयमा पढिने छैन, जुन यस आयतको विपरीत छ ।

[2]अर्थात् आफ्नो शत्रुको पिछा गर्नुमा कमजोरी नदेखाउ, बरु उनको विरोधमा कठोर प्रयत्न गर र घात लगाएर बस ।

[3]अर्थात् घाउ त तिमीलाई पनि र उनीहरूलाई पनि दुईटैलाई लागेका छन्, परन्तु यी घाउहरुको प्रतिफलमा तिमीलाई त अल्लाहसित आशा छ, परन्तु उनी त्यसको आशा राख्दैनन् । यसकारण आख़िरत (परलोक) को प्रतिकारलाई प्राप्त गर्नको निम्ति जुन प्रयास तिमी गर्न सक्दछौ, ती काफ़िर गर्न सक्दैनन् ।

[4]यी आयतहरु (१०४ देखि ११३) सम्मको अवतरणका विशेषतामा भनिएको छ कि अन्सारका क़बीला (समुदाय) बनी जुफ़रमा एक व्यक्ति तोअमः अथवा बशीर बिन उवैरीकले एक अन्सारीको कवच चोरीहाल्यो, जब यसको चर्चा भयो र उसलाई आफ्नो चोरीको रहस्य थाहा लाग्न भय भयो तब उसले त्यो कवच एक यहूदीको घरमा फ्याँकिदियो र बनी जुफरका केही व्यक्तिहरूलाई लिएर नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भयो र ती सबैले भने कि कवचको

गर्नेहरूको पक्षधर नबन ।[1]

(१०६) अल्लाह (तआ़ला) सित क्षमा माँग,[2] नि:सन्देह अल्लाह तआ़ला क्षमाशील कृपानिधि छ ।

وَّ اسْتَغْفِرِ اللّٰهَ ۭ اِنَّ اللّٰهَ كَانَ غَفُوْرًا رَّحِيْمًا ۝

चोर अमुक यहूदी हो । यहूदी नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भयो र उसले भन्यो कि बनी उबैरिकले कवच चोरी गरी मेरो घरमा फ्याँकिदिएको छ । बनी जुफर तथा बनी उबैरिक (तुअम: अथवा बशीर आदि) चतुर थिए र नबी सल्लल्लाहु अलैहि वसल्लमलाई यो विश्वास दिलाउँदै रहे कि चोर यहूदी नै हो । र त्यो तोअम: माथि अभियोग लगाउनुमा झुठो छ । नबी सल्लल्लाहु अलैहि वसल्लम पनि उनका चिप्लो कुराहरूबाट प्रभावित भइहाल्नुभयो र निकट थियो कि अन्सारीलाई चोरीको अभियोगबाट निर्दोष र यहूदीलाई चोरीको अपराधी घोषित गरिदिनु हुन्थ्यो कि त्यतिखेर अल्लाह तआ़लाले यो आयत अवतरित गर्नुभयो । जसबाट एउटा यो कुरा ज्ञात भयो कि नबी सल्लल्लाहु अलैहि वसल्लम एउटा मनुष्य हुनुको कारण भ्रममा पर्न सक्नुहुन्छ । दोस्रो कुरो यो ज्ञात भयो कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम परोक्षज्ञ हुनुहुन्नथ्यो अन्यथा उहाँ तुरुन्तै वास्तविकता बुझिहाल्नु हुन्थ्यो । तेस्रो कुरा यो ज्ञात भयो कि अल्लाह तआ़ला आफ्नो पैग़म्बरको रक्षा गर्दछ, र यदि जहिले पनि सत्य लुकेको तथा त्यसबाट विचलित हुने अवस्थामा, अल्लाह तआ़ला त्यसको सवधान र सुधार गरिदिन्छ । जस्तो कि नबीहरुको चरित्रको विशेषता छ । यो निर्दोषको त्यो सर्वोच्च स्थान हो, जुन नबीहरूका अतिरिक्त कसैलाई प्राप्त छैन ।

[1]यसको अर्थ पनि त्यही बनी उबैरिक हुन्, जसले चोरी स्वयं गरे, तर आफ्नो वाक्पटुताको कारण यहूदीलाई चोर प्रमाणित गर्न दृढ थिए । आगामी आयतमा पनि उनका तथा उनका पक्षधरहरूको कुचक्रलाई अझै स्पष्ट गरेर नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सावधान गरिँदैछ ।

[2]अर्थात् साँचो कुरो प्रमाणित नभईकन उहाँ सल्लल्लाहु अलैहि वसल्लमले जुन विश्वासघातिहरूको समर्थन गर्नुभएको छ, त्यसको लागि अल्लाहसित क्षमा माँगून् । यसबाट ज्ञात भयो कि दुबै पक्षहरुको विषयमा जबसम्म पूर्ण-विश्वास हुँदैन कि सत्य को छ, त्यसको पक्षपात तथा समर्थन उचित छैन । यसको अतिरिक्त यदि कोही व्यक्ति आफ्नो वाक्पटुताले तथा धोखा दिएर न्यायलय अथवा सामयिक न्यायधिशबाट आफ्नो पक्षमा निर्णय गराउँछ, यद्यपि त्यो सत्यमा आधारित थिएन त यस्तो निर्णयको अल्लाह समक्ष कुनै महत्व छैन । यस कुरालाई नबी सल्लल्लाहु अलैहि वसल्लमले यसप्रकार वर्णन गर्नुभएको छ "सावधान" ! म एउटा मनुष्य नै हूँ र जुनप्रकार सुन्दछु, त्यसैको प्रकाशमा निर्णय गर्दछु । सम्भव छ कि एउटा व्यक्ति आफ्नो तर्क-वितर्क प्रस्तुत गर्नमा निपुण तथा चलाख होस् ।

(१०७) र उनीहरूको पक्षबाट झगडा नगर जो स्वयं आफ्नै विश्वासघात गर्दछन्। निःसन्देह धोकेबाज पापी अल्लाह (तआला) लाई राम्रो लाग्दैन।

وَلَا تُجَادِلْ عَنِ الَّذِيْنَ يَخْتَانُوْنَ اَنْفُسَهُمْ ۗ اِنَّ اللّٰهَ لَا يُحِبُّ مَنْ كَانَ خَوَّانًا اَثِيْمًا ۝

(१०८) उनी मानिसहरूबाट त लुक्छन्, तर अल्लाहबाट लुक्न सक्दैनन्, त्यो उनको साथमा रहन्छ जबकि उनी रातमा अप्रिय कथनको योजना बनाउँछन् तथा अल्लाह उनका कृतिहरुलाई घेरेको छ।

يَّسْتَخْفُوْنَ مِنَ النَّاسِ وَلَا يَسْتَخْفُوْنَ مِنَ اللّٰهِ وَهُوَ مَعَهُمْ اِذْ يُبَيِّتُوْنَ مَا لَا يَرْضٰى مِنَ الْقَوْلِ ۗ وَكَانَ اللّٰهُ بِمَا يَعْمَلُوْنَ مُحِيْطًا ۝

(१०९) हो, यी तिमीहरू नै हौ जो उनका पक्षमा संसारमा लडे, तर प्रलयका दिन उनको तर्फबाट अल्लाहसित कसले छलफल गर्नेछ तथा को उनको वकील बनेर उभिने छ ?।[1]

هٰٓاَنْتُمْ هٰٓؤُلَآءِ جٰدَلْتُمْ عَنْهُمْ فِى الْحَيٰوةِ الدُّنْيَا ۫ فَمَنْ يُّجَادِلُ اللّٰهَ عَنْهُمْ يَوْمَ الْقِيٰمَةِ اَمْ مَّنْ يَّكُوْنُ عَلَيْهِمْ وَكِيْلًا ۝

(११०) तथा जोसुकै पनि नराम्रो गर्दछ अथवा स्वयं आफूमाथि अत्याचार गर्दछ अनि अल्लाहसित क्षमा माँगदछ त अल्लाहलाई क्षमाशील, दयानिधि पाउने छ।

وَمَنْ يَّعْمَلْ سُوْٓءًا اَوْ يَظْلِمْ نَفْسَهٗ ثُمَّ يَسْتَغْفِرِ اللّٰهَ يَجِدِ اللّٰهَ غَفُوْرًا رَّحِيْمًا ۝

(१११) र जो पाप गर्दछ उसको बोझ उसैमाथि छ,[2] तथा अल्लाह सर्वज्ञ विज्ञाता छ।

وَمَنْ يَّكْسِبْ اِثْمًا فَاِنَّمَا يَكْسِبُهٗ عَلٰى نَفْسِهٖ ۗ وَكَانَ اللّٰهُ عَلِيْمًا حَكِيْمًا ۝

र म उसको वार्तालापबाट प्रभावित भई उसको पक्षमा निर्णय गरिदिऊ, यद्यपि त्यो सत्यमा छैन र यसप्रकार कुनै अन्य मुसलमानको अधिकार उसलाई दिऊ, त उसले याद राख्नुपर्छ कि आगोको टुक्रा हो, यो उसको इच्छाको कुरो हो कि त्यसलाई लेओस् अथवा त्यागिदेओस्। (सहीह बुखारी, किताबुश शाहादः वल हेयल वल अहकाम, सहीह मुस्लिम किताबुल अकज़ीयः)

[1]अर्थात् जव यस पापको कारण पकड हुनेछ, त कसले अल्लाहको पकडबाट त्यसलाई बचाउन सक्नेछ ?

[2]यस विषयको दोस्रो आयतमा अल्लाह तआला आदेश गर्दछ :

(११२) तथा जो कोही दोष अथवा पाप गर्दछ अनि कुनै निर्दोषमाथि दोष लगाउँछ, उसले खुल्लारुपले आरोप तथा घोर पाप गर्‍यो ।[1]

وَمَن يَكْسِبْ خَطِيٓـَٔةً أَوْ إِثْمًا ثُمَّ يَرْمِ بِهِۦ بَرِيٓـًٔا فَقَدِ ٱحْتَمَلَ بُهْتَٰنًا وَإِثْمًا مُّبِينًا ﴿١١٢﴾

(११३) र यदि तपाईंमाथि अल्लाहको दया एवं कृपा नभएको भए उनीहरूको एउटा गुटले तपाईंमाथि विपथ गर्ने षड्यन्त्र रचिसकेको थियो[2] किन्तु उनी स्वयंलाई विपथ गर्दछन् तथा उनी तपाईंलाई कुनै हानि पुर्‍याउन सक्दैनन् र अल्लाहले तपाईंमाथि किताब तथा ज्ञान अवतरित गरेको छ र तपाईं जुन कुरा जान्नु हुन्नथ्यो, त्यसको ज्ञान[3] दिएको छ तथा तपाईंमाथि अल्लाहको ठूलो अनुकम्पा छ ।

وَلَوْلَا فَضْلُ ٱللَّهِ عَلَيْكَ وَرَحْمَتُهُۥ لَهَمَّت طَّآئِفَةٌ مِّنْهُمْ أَن يُضِلُّوكَ وَمَا يُضِلُّونَ إِلَّآ أَنفُسَهُمْ وَمَا يَضُرُّونَكَ مِن شَىْءٍ وَأَنزَلَ ٱللَّهُ عَلَيْكَ ٱلْكِتَٰبَ وَٱلْحِكْمَةَ وَعَلَّمَكَ مَا لَمْ تَكُن تَعْلَمُ وَكَانَ فَضْلُ ٱللَّهِ عَلَيْكَ عَظِيمًا ﴿١١٣﴾

---

﴿وَلَا تَزِرُ وَازِرَةٌ وِزْرَ أُخْرَىٰ﴾

"कुनै बोझ उठाउनेवाला अन्य कसैको बोझ उठाउने छैन ।" (सूर: बनी इस्राईल-१५)

अर्थात् कोही कसैको उत्तरदायी हुनेछैन, प्रत्येक व्यक्तिलाई त्यही प्राप्त हुन्छ, जुन कमाएर साथमा लगेको होला ।

[1]जुनप्रकार बनू उबैरिकले गर्‍यो कि चोरी त स्वयंले गर्‍यो र आरोप अर्कैमाथि लगाइदियो । यो हकार्नु सामान्य हो, जसमा बनू उबैरिक पनि सम्मिलित छ र उनी पनि जो यसप्रकारमा दुराचरणमा लीन हुनेछन् ।

[2]यो अल्लाह तआलाको त्यस विशेष रक्षाको वर्णन हो, जसको प्रबन्ध नबीहरूको लागि गरिन्छ जुन नबीहरुमाथि अल्लाहको विशेष कृपा तथा विशेष दयाको दर्पण हो । طَائِفَةٌ (तायेफ:) (गुट) बाट तात्पर्य ती मानिसहरू हुन् जो बनू उबैरिकको समर्थनमा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उनको सफाई प्रस्तुत गरिराखेका थिए, जसबाट यो अनुमान भइसकेको थियो कि नबी सल्लल्लाहु अलैहि वसल्लम त्यस व्यक्तिलाई चोरीको अपराधबाट मुक्त गरिदिनु हुनेछ, जो वास्तवमा चोर थियो ।

[3]यो अर्को अनुकम्पा तथा अनुग्रहको वर्णन हो, जुन उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि धर्मशास्त्र (पवित्र कुर्आन) तथा हदीस (सुन्नत) उतारेर आवश्यक कुराको ज्ञान दिएर भनियो । जुनप्रकार कि अर्को स्थानमा आदेश गर्‍यो :

(११४) उनीहरूका अधिकांश कानेखुसिमा कुनै भलाई छैन,[1] परन्तु जसले उपकार अथवा भलाई अथवा मानिसहरूबीच सुधार को निम्ति आदेश दियो[2] तथा जो यो कार्य अल्लाहको प्रसन्नता खोजनलाई गर्नेछ[3] हामीले त्यसलाई वास्तवमा धेरै ठूलो (प्रतिकार) दिनेछौं ।[4]

لَا خَيْرَ فِي كَثِيرٍ مِّن نَّجْوَاهُمْ إِلَّا مَنْ أَمَرَ بِصَدَقَةٍ أَوْ مَعْرُوفٍ أَوْ إِصْلَاحٍ بَيْنَ النَّاسِ ۚ وَمَن يَفْعَلْ ذَٰلِكَ ابْتِغَاءَ مَرْضَاتِ اللَّهِ فَسَوْفَ نُؤْتِيهِ أَجْرًا عَظِيمًا ﴿١١٤﴾

﴿وَكَذَٰلِكَ أَوْحَيْنَا إِلَيْكَ رُوحًا مِّنْ أَمْرِنَا ۚ مَا كُنتَ تَدْرِي مَا الْكِتَابُ وَلَا الْإِيمَانُ﴾

"यसैप्रकार हामीले तिमीतिर (कुरआन लिएर) एक फरिश्तालाई आफ्नो आदेशले पठायौं, तिमी जान्दैनथ्यौ कि किताब के हो र ईमान के हो ?" (सूर: अल-शूरा:-५२)

﴿وَمَا كُنتَ تَرْجُوا أَن يُلْقَىٰ إِلَيْكَ الْكِتَابُ إِلَّا رَحْمَةً مِّن رَّبِّكَ﴾

"र तिमीलाई यो आशा थिएन कि तिमीमाथि किताब अवतरित गरिनेछ, परन्तु तिम्रो प्रभुको कृपाले (यो किताब अवतरित भयो)" (सूर: अल-कसस-८६)

यी सबै आयतहरुवाट (पवित्र कुरआनका सुत्रहरु) यो ज्ञात भयो कि अल्लाहले उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि कृपा तथा उपकार गर्‍यो तथा किताब एवं विवेक दियो, यसका अतिरिक्त अन्य धेरैजसो कुराको ज्ञान उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) लाई प्रदान गरियो, जसबाट उहाँ सल्लल्लाहु अलैहि वसल्लम अनभिज्ञ हुनुहुन्थ्यो । यो पनि एक प्रकारले उहाँको परोक्षज्ञ (अन्तर्यामी) हुने कुरोको इन्कार हो, किनभने यदि उहाँलाई परोक्षको ज्ञान भएको भए, उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) लाई कोही अन्यबाट विद्याग्रहण गर्नुको के आवश्यकता थियो । र जसलाई अरुहरूवाट ज्ञान प्राप्त हुन्छ, वह्‌यी (ईशवाणी) द्वारा अथवा अन्य कुनै साधनद्वारा, त त्यो परोक्षको ज्ञानी हुन सक्दैन ।

[1] نَجویٰ (नजवा) (गुप्तमंत्रणा) बाट तात्पर्य ती कुराहरू हुन्, जो अवसरवादी आपसमा मुसलमानहरूका विरुद्ध अथवा एक-अर्काको विरूद्ध गर्दथे ।

[2]अर्थात् दान-पुण्य, भलाई (जो हर प्रकारको पुण्यमा सम्मिलित छ) तथा मानिसहरूवीच सुधार गर्ने विषयमा परामर्श, पुण्यमा आधारित छन् । जस्तो कि यी कार्यहरूको विशेषता तथा महत्वमाथि हदीसमा पनि जोड दिइएको छ ।

[3]किनभने यदि निःस्वार्थता (अर्थात् अल्लाहको प्रसन्नताको उद्देश्य) हुने छैन भने ठूलोभन्दा ठूलो कर्म पनि खेर जानेछ, बरु आपत्ति बन्न जानेछ । परमेश्वरले हामीलाई पाखण्ड तथा देखावटी कामबाट बचाऊन् ।

[4]हदीसहरुमा वर्णित कर्महरुको ठूलो महत्व छ । अल्लाहको मार्गमा उचित रूपले गरिएको कमाईबाट एक खजूर दान गर्नुको पुण्य ओहद पर्वतको मात्रामा हुनेछ । (सहीह मुस्लिम किताबुल ज़कात)

وَمَن يُشَاقِقِ ٱلرَّسُولَ مِنۢ بَعۡدِ مَا تَبَيَّنَ لَهُ ٱلۡهُدَىٰ وَيَتَّبِعۡ غَيۡرَ سَبِيلِ ٱلۡمُؤۡمِنِينَ نُوَلِّهِۦ مَا تَوَلَّىٰ وَنُصۡلِهِۦ جَهَنَّمَۖ وَسَآءَتۡ مَصِيرًا ﴿١١٥﴾

(११५) र जसले सत्यमार्ग स्पष्ट भए पश्चात रसूल (मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम) को विरोध गर्नेछ तथा मुसलमानहरूको मार्ग बाहेक खोजी गर्नेछ, हामी त्यसलाई त्यतै जता त्यो फर्कन खोज्छ, फर्काइदिनेछौं, अनि हामीले त्यसलाई नरकमा फ्याँकिदिनेछौं तथा त्यो अति नराम्रो स्थान हो ।

सत्य कुराको प्रचार गर्नुको पनि साह्रै ठूलो महत्व छ । यसैप्रकार सम्बन्धिहरू, मित्रहरू तथा आपसी कटुताको कारण अलग भएका मानिसहरूबीच सन्धि गराइदिनु बहुत ठूलो कर्म हो । एक हदीसमा यसलाई ऐच्छिक व्रत (रोज़ाहरू), ऐच्छिक नमाज़हरू तथा ऐच्छिक दानभन्दा पनि श्रेष्ठ भनिएको छ । आदेश छ :

«ألا أخبركم بأفضل من درجة الصيام والصلاة والصدقة؟» قالوا بلى: قال: «إصلاح ذات البين، قال -: وفساد ذات البين هي الحالقة».

"के मैले तिमीलाई नमाज़, रोज़ा र दानभन्दा श्रेष्ठकार्य नभनिदिऊं ? उनले भने, अवश्य । वहाँले भन्नुभयो आपसी कटुताको कारण अलग्ग भएका मानिसहरूमा सन्धि गराईदिनु ।" (अबू दाऊद, किताबुल अदब, तिर्मिजी किताबुल बिर्र तथा मुसनद अहमद ६/४४४ देखि ४४५ सम्म)

यहाँसम्मकि सन्धि गराउनेवालालाई झूठ बोल्ने सम्मको आज्ञा प्रदान गरिएको छ । ताकि उसलाई एक-अर्कालाई निकट ल्याउनको निम्ति कुनै कारणवश यसको आवश्यकता पर्दछ, भने त्यो यसलाई पनि प्रयोग गरोस् ।

ليس الكذاب الذي يصلح بين الناس، فينمي خيرا أو يقول خيرا

"त्यो मिथ्यावादी होइन जो एक गराउनको लागि राम्रो कुरो फैलाउँछ तथा राम्रो कुरा गर्दछ ।" (अल-बुख़ारी किताबुल सुलह, मुस्लिम तथा अल-तिर्मिजी किताबुल बिर्र र अबूदाऊद किताबुल अदब)

[1]मार्गदर्शन प्रकाशित भइहाले पश्चात रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको विरोध तथा मुसलमानहरूको मार्ग छोडेर कुनै अन्यको मार्गलाई अनुशरण इस्लामबाट वहिष्कृत हुनु हो । जसमा यहाँ नरकको धम्की दिइएको छ । मुसलमानहरूसित तात्पर्य नबीका सहचरहरु (رضي الله عنهم) हुन्, जो इस्लाम धर्मका प्रथम अनुयायी र त्यसको शिक्षाको पूर्णरूपले आदर्श थिए । र यी आयतहरुका अवतरणको समय कुनै अन्य मुसलमानहरूको गुट थिएन कि उनको आशय हो । यसैकारण रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको विरोध तथा नि:स्वार्थी

إِنَّ اللَّهَ لَا يَغْفِرُ أَن يُشْرَكَ بِهِۦ وَيَغْفِرُ مَا دُونَ ذَٰلِكَ لِمَن يَشَآءُ ۚ وَمَن يُشْرِكْ بِاللَّهِ فَقَدْ ضَلَّ ضَلَٰلًۢا بَعِيدًا ﴿١١٦﴾

(११६) अल्लाह तआ़ला आफ्नो साथमा मिश्रण गरिने कुरो कदापि क्षमा गर्नेछैन र यसबाहेक (पापहरू) लाई जसको निम्ति चाहेमा क्षमा गरिदिनेछ तथा जसले अल्लाहका साथ मिश्रण (शिर्क) गऱ्यो त्यो मार्ग-विचलित भई धेरै टाढा पुग्न गयो ।

إِن يَدْعُونَ مِن دُونِهِۦٓ إِلَّآ إِنَٰثًا وَإِن يَدْعُونَ إِلَّا شَيْطَٰنًا مَّرِيدًا ﴿١١٧﴾

(११७) यिनी त अल्लाह (तआ़ला) लाई छाडि केवल देवीहरूलाई पुकार्दछन् ।[1] र वास्तवमा यिनी दुष्ट शैतानलाई पुकार्दछन् ।[2]

मुसलमानहरूको मार्ग बाहेक अन्यको अनुगमन दुवै वास्तवमा एकै वस्तुको नाम हो । यसकारण सहाबा किराम رضی الله عنهم को मार्ग तथा विधिको विरोध नै अविश्वास अथवा विपथ हो । केही विद्वानहरुले ईमानवालाहरूको बाटो अथवा मार्गवाट तात्पर्य सम्पूर्ण उम्मत लिएका छन् अर्थात् सम्पूर्ण उम्मतसित विरोध पनि अधर्म हो । सम्पूर्ण उम्मतसित तात्पर्य छ कि कुनै समस्यामा उम्मतका सबै विद्वान तथा ज्ञानीहरूको सहमति । अथवा कुनै समस्यामा सहावा किराम رضی الله عنهم को सहमति यी दुवै परिस्थितिहरू उम्मतको सहमतिका रूप हुन् तथा दुवैबाट इन्कार अथवा तिनीमध्ये कुनै एउटाको इन्कार अधर्म हो । तैपनि सहावा किराम رضی الله عنهم को सहमति धेरैजसो समस्याहरुमा मिल्छन्, अर्थात् सहमतिको यो स्थिति त मिल्छ । तर सहावाको सर्वसम्मति पश्चात कुनै समस्यामा सम्पूर्ण उम्मतको एक मत तथा सहमतिका दावी धेरैजसो समस्याहरुमा गरिएका छन्, तर वास्तवमा सर्वसम्मत समस्याहरू वहुतै कम छन्, जसमा वास्तवमा उम्मतका सबै ज्ञानी तथा आलिमहरूको सहमति होस् । तैपनि यसप्रकारका जुन समस्याहरु छन्, उनका इन्कार पनि हदीसहरूमा छ, "अल्लाह तआ़ला मेरो उम्मतलाई विचलनमा एकमत गर्नेछैन र सहमतमा अल्लाहको हात छ ।" (सहीह तिर्मिजी, लिल अलबानी भाग २, संख्या १७५९)

[1] اناث (इनास) (स्त्रीहरू) सित तात्पर्य या त मूर्तिहरु हुन्, जसका नाम स्त्रीलिंग थिए । जस्तै (لات (लात), عزى (उज्जा), مناة (मनात) तथा نائلة (नायेल:) आदि । अथवा तात्पर्य फरिश्ताहरू हुन्, किनभने अरबका मूर्तिपूजक फरिश्ताहरूलाई अल्लाहका पुत्रीहरू ठान्दथे र तिनका पूजा गर्दथे ।

[2] मूर्ति, फरिश्ताहरू तथा अन्य मानिसहरूको पूजा वास्तवमा शैतानको पूजा हो किनभने शैतान नै मनुष्यलाई अल्लाहको द्वारबाट फकाएर अन्यको दरबाररमा तथा ढोकामा नत्मस्तक गराउँछ, जस्तो कि अगाडीको आयतमा छ ।

(११८) जसलाई अल्लाह (तआ़ला) ले धिक्कारेको छ । र त्यसले भनेको छ कि म तिम्रा भक्तहरूबाट निर्धारित भाग लिएर नै छाड्नेछु ।[1]

لَّعَنَهُ اللَّهُ وَقَالَ لَأَتَّخِذَنَّ مِنْ عِبَادِكَ نَصِيبًا مَّفْرُوضًا ﴿١١٨﴾

(११९) र उनीहरूलाई मार्गबाट विचलित गराइराख्नेछु र झूठा आशाहरू दिलाइरहनेछु ।[2] र उनीहरूलाई शिक्षा दिनेछु कि पशुहरुका कान चिरुन्[3] र उनीसित भन्नेछु कि अल्लाहले बनाएको संरचना बिगाडिदेऊन् ।[4] सुन, जसले अल्लाहलाई छाडि शैतान

وَلَأُضِلَّنَّهُمْ وَلَأُمَنِّيَنَّهُمْ وَلَآمُرَنَّهُمْ فَلَيُبَتِّكُنَّ آذَانَ الْأَنْعَامِ وَلَآمُرَنَّهُمْ فَلَيُغَيِّرُنَّ خَلْقَ اللَّهِ ۚ وَمَن يَتَّخِذِ الشَّيْطَانَ وَلِيًّا مِّن دُونِ اللَّهِ فَقَدْ

[1]"निर्धारित भाग" बाट तात्पर्य भोग-प्रसाद (नजर-नियाज़) पनि हुनसक्दछ, जुन मूर्तिपूजक, चिहानहरु (समाधिहरु) मा दफनाइए (गाडिएका) व्यक्तिको नाममा निकाल्दछन् तथा नरकवासीहरूको त्यो भाग पनि हुनसक्दछ, जसलाई शैतानले विचलन गराई आफूसँग नरकमा लैजानेछ ।

[2]यो ती झूठा आशाहरु हुन्, जुन शैतानको प्रलोभन तथा हस्तक्षेपहरू उत्पन्न हुन्छन् र मानिसहरूका पथ-भ्रष्टताको कारण बन्दछन् ।

[3]यो بحيرة (वहीर:) तथा سائبة (सायब:) पशुहरुका चिन्ह तथा रूप हुन् । ती मिश्रणवादी तिनका मूर्तिहरूका नामले दान गर्दथे, त पहिचानको निम्ति कान आदि चिरिदिने गर्दथे ।

[4]अल्लाहको सृष्टिमा परिवर्तनका कैयन् रूप वर्णन गरिएका छन् । एक त यही जसको वर्णन यहाँ भयो अर्थात् कान आदि काट्नु, चिर्नु, छेड्नु, यिनका अतिरिक्त अन्य प्रकारका रूप हुन् । जस्तै अल्लाह तआ़लाले सौन्दर्य, सूर्य, ढुङ्गा तथा अग्नि आदि पदार्थ विभिन्न उद्देश्यले बनाएका छन्, तर मूर्तिपूजकहरूले तिनका उत्पत्तिका उद्देश्यलाई बदलेर तिनलाई पूज्य बनाइहाले । अथवा बदलावको अर्थ प्रकृतिलाई बदलदिनु हो, अथवा वर्जित तथा अवर्जितमा परिवर्तन आदि हुन् । यसैप्रकार परिवर्तनमा पुरुषहरूको नसवन्दी गर्नु र त्यसैप्रकार स्त्रीहरूलाई अपरेशन गरी तिनलाई जन्म दिनुबाट रोक्नु, सौन्दर्यताको नाममा आँखीभौंका कपाल उखाली आफ्नो रूप परिवर्तन गर्नु र शरीरको कुनै भागमा चित्र आदि निकाल्नु पनि सम्मिलित छ । यी सबै शैतानी कार्य हुन् र यिनीवाट वचाव गर्नु आवश्यक छ । तर पशुहरूलाई खसी पार्नु कि जसबाट अधिक लाभ प्राप्त होस् अथवा मासु धेरै राम्रो होस् अथवा यसैप्रकारको कुनै उचित प्रयोजन भएमा ठीक छ । यसको समर्थन यसबाट पनि हुन्छ कि नबी करीम सल्लल्लाहु अलैहि वसल्लम ले वधिया पशु बलि (कुर्बानी) मा दिनुभयो ।

خَسِرَ خُسْرَانًا مُّبِينًا ﴿١١٩﴾

लाई आफ्नो मित्र बनाउने छ त्यो खुल्ला रूपले घाटामा हुनेछ ।

يَعِدُهُمْ وَيُمَنِّيهِمْ ۖ وَمَا يَعِدُهُمُ الشَّيْطَانُ إِلَّا غُرُورًا ﴿١٢٠﴾

(१२०) त्यो उनीहरूसित (मौखिक) वाचा गरिराख्ने छ र प्रलोभन दिराख्ने छ (परन्तु याद राख) शैतानका जुन वाचा उनीसित छन्, त्यो पूर्णरूपले धोका हो ।

أُولَٰئِكَ مَأْوَاهُمْ جَهَنَّمُ وَلَا يَجِدُونَ عَنْهَا مَحِيصًا ﴿١٢١﴾

(१२१) यिनी त्यसता हुन् जसको स्थान नरक हो, जहाँबाट उनीहरूलाई छुटकारा प्राप्त हुनेछैन ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ سَنُدْخِلُهُمْ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا أَبَدًا ۖ وَعْدَ اللَّهِ حَقًّا ۚ وَمَنْ أَصْدَقُ مِنَ اللَّهِ قِيلًا ﴿١٢٢﴾

(१२२) र जो ईमान स्थापित गर्दछन् तथा राम्रो कार्य गर्दछन्, हामीले उनलाई ती स्वर्गहरूमा लैजानेछौं, जसका धरातलमा नदीहरु बगिराखेका छन्, जहाँ उनी सधैं रहनेछन् । यो हो अल्लाहको वचन जो वस्तुतः सत्य छ र अल्लाहभन्दा अधिक सत्य आफ्नो कुरोमा को हुनसक्दछ ?[1]

لَّيْسَ بِأَمَانِيِّكُمْ وَلَا أَمَانِيِّ أَهْلِ الْكِتَابِ ۗ مَن يَعْمَلْ سُوءًا يُجْزَ

(१२३) तिम्रा आकांक्षाहरु तथा अहले किताबका (किताब प्रदान गरिएका) आकाँक्षाहरुबाट केही हुनेछैन, जसले

तीं पशुहरुलाई बधिया (खसी) पार्नु उचित नभएको भए उहाँ सल्लल्लाहु अलैहि वसल्लमले तिनको बलि दिनु हुन्नथ्यो ।

[1]शैतानी वचनहरू त खुल्ला धोका हुन्, त यसको सापेक्ष अल्लाह तआला्ले जुन वचन ईमानवालाहरूलाई दिएका छन्, सच्चा तथा यथार्थ हुन् । र अल्लाह तआलाभन्दा अधिक सच्चा को हुनसक्दछ ? परन्तु मनुष्यको कुरा नै विचित्र छ, यो सत्यवादीहरूको कुरा कम मान्दछ र झूठाहरुको पछाडि अधिक हिंड्दछ । अतः तपाईं हेरिहाल्नुस् शैतानी प्रचलन धेरै छन् र अल्लाहका आदेशहरुका अनुगामी प्रत्येक काल तथा स्थानमा कमै रहिआएका छन्

و قليل من عبادى الشكور

"तथा मेरा कृतज्ञ भक्त अति अल्प छन् ।" (सूरः सबा-१३)

بِهٖ ۙ وَلَا يَجِدْ لَهٗ مِنْ دُوْنِ اللّٰهِ وَلِيًّا وَّلَا نَصِيْرًا ﴿١٢٣﴾

नराम्रो गर्नेछ, त्यसको दण्ड पाउनेछ र अल्लाह बाहेक आफ्नो कोही संरक्षक एवं सहायक पाउने छैन ।

وَمَنْ يَّعْمَلْ مِنَ الصّٰلِحٰتِ مِنْ ذَكَرٍ اَوْ اُنْثٰى وَهُوَ مُؤْمِنٌ فَاُولٰٓئِكَ يَدْخُلُوْنَ الْجَنَّةَ وَلَا يُظْلَمُوْنَ نَقِيْرًا ﴿١٢٤﴾

(१२४) तर जसले राम्रो कर्म गर्नेछ चाहे त्यो पुरुष होस् अथवा स्त्री यदि त्यो निष्ठावान छ भने, नि:सन्देह यसप्रकारका मानिस स्वर्गमा जानेछन् र अलिकति पनि तिनीहरूको अधिकार खोसिने छैन ।[1]

وَمَنْ اَحْسَنُ دِيْنًا مِّمَّنْ اَسْلَمَ وَجْهَهٗ لِلّٰهِ وَهُوَ مُحْسِنٌ وَّاتَّبَعَ مِلَّةَ اِبْرٰهِيْمَ حَنِيْفًا ۗ وَاتَّخَذَ اللّٰهُ اِبْرٰهِيْمَ خَلِيْلًا ﴿١٢٥﴾

(१२५) र त्यसभन्दा उत्तम धर्म भएको को हुनसक्छ, जसले अल्लाह समक्ष पूर्ण आत्म-समर्पण गऱ्यो र त्यो सदाचारी पनि छ, र इब्राहीमको धर्मको अनुसरण गरेको छ जो एकाग्रचित्त थिए तथा इब्राहीमलाई अल्लाहले आफ्नो घनिष्ट मित्र बनाएको थियो ।[2]

[1]जस्तो कि पहिले नै वर्णन भइसकेको छ कि अहले किताब आफ्नो विषयमा ठूलो शुभ आशामा मग्न थिए । यहाँ अल्लाह तआ़लाले उनका शुभ-आशाहरुमाथि पर्दा हटाउँदै पुन: भन्यो कि आख़िरतका सफलता मात्र आशा तथा आकाँक्षाहरुबाट प्राप्त हुने छैनन् । यसका लागि ईमान तथा सत्कर्मको कोष हुनु आवश्यक छ । यदि यसको विपरीत कर्महरुको सूचीमा नराम्रा कुराहरू धेरै हुन्छन् भने त्यसको दण्ड भोग्नु नै पर्नेछ । त्यहाँ कोही मित्र तथा सहायक हुनेछैन, जसले कु-कर्मको दण्डबाट बचाउन सकोस् । आयतमा अहले किताबका साथ-साथ ईमानवालालाई पनि अल्लाहले सम्बोधित गरेको छ, ताकि त्यो पनि यहूदी तथा इसाईहरूबाट जस्तै शुभ आशा, भ्रम तथा कर्मविहीन, आशा तथा आकांक्षाहरूबाट आफूलाई बचाउन सकून् । तर अफ्सोच, मुसलमान यी चेतावनीहरुका पश्चात पनि तिनैको विचारमा विलीन भइहाले जसमा पूर्वका समुदाय डुबेका थिए । र आज अकर्म तथा कुकर्म मुसलमानको पनि प्रतीक बनेको छ र यसको उपरान्त त्यो "उम्मते मरहूमा" भनाउन पुनराग्रह गरिराखेको छ ।

هدانا الله تعالىٰ

[2]यहाँ सफलताको एउटा स्तर तथा त्यसको आदर्शको वर्णन गरिदैछ । मापदण्ड हो कि स्वयंलाई अल्लाहमा अर्पण गरिदेओस्, परोपकारी बनोस् र इब्राहीमको धर्मको अनुसरण गरोस् । र आदर्श आदरणीय इब्राहीम हुन्, जसलाई अल्लाह

وَلِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۭ وَكَانَ اللّٰهُ بِكُلِّ شَيْءٍ مُّحِيْطًا ﴿١٢٦﴾

(१२६) र जे-जति पनि आकाशहरू तथा पृथ्वीमा छ, अल्लाहकै हो तथा अल्लाहले प्रत्येक वस्तुलाई घेरेको छ ।

وَيَسْتَفْتُوْنَكَ فِي النِّسَاۗءِ ۭ قُلِ اللّٰهُ يُفْتِيْكُمْ فِيْهِنَّ ۙ وَمَا يُتْلٰى عَلَيْكُمْ فِي الْكِتٰبِ فِيْ يَتٰمَي النِّسَاۗءِ الّٰتِيْ لَا تُؤْتُوْنَهُنَّ مَا كُتِبَ لَهُنَّ وَتَرْغَبُوْنَ اَنْ تَنْكِحُوْهُنَّ وَالْمُسْتَضْعَفِيْنَ مِنَ الْوِلْدَانِ ۙ وَاَنْ

(१२७) उनी नारीहरूको विषयमा तपाईंसित प्रश्न गर्दछन्,[1] तपाईं भनिदिनुस् कि स्वयं अल्लाह तिमीलाई उनको विषयमा आदेश दिन्छ र जे-जति (कुर्आन) बाट तिम्रो समक्ष पढिन्छ, त्यो ती अनाथ नारीहरू (केटीहरु) को सन्दर्भमा छ, जसलाई तिमी अनिवार्य अधिकार दिँदैनौ [2] तथा उनीसित विवाह गर्न चाहन्छौ [3]

तआ़लाले आफ्नो ख़लील बनायो । ख़लीलको अर्थ यस्तो व्यक्ति हो जसको हृदयमा अल्लाह तआ़लाको प्रेम यसप्रकार बसेको होस् कि त्यसमा कुनै अन्यको स्थान नरहोस् । ख़लील (कर्मको रूप हो) तथा अर्थको आधारमा कर्ता हो । जस्तै अलिमको अर्थ ज्ञानी र केही भन्छन् कि कर्मकै अर्थमा छ । जस्तै हवीबको अर्थ छ महवूव । र आदरणीय इब्राहीम निःसन्देह अल्लाहका प्रिय पनि थिए र प्रेमी पनि (अलैहिस्सलातु वस्सलाम) । (फ़तहुल क़दीर) र नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएको छ, "अल्लाहले मलाई पनि ख़लील बनाएको छ, जुनप्रकार उसले आदरणीय इब्राहीमलाई ख़लील बनायो ।" (सहीह मुस्लिम किताबुल मसाजिद)

[1]स्त्रीहरुका विषयमा जुन प्रश्न हुँदै गर्दथे, यहाँबाट तिनका उत्तर दिइराखिएका छन् ।

[2] وما يتلى عليكم (यसको प्रभाव) الله يفتيكم माथि छ, अर्थात् अल्लाह तआ़ला उनको विषयमा स्पष्टीकरण गरिराखेको छ र अल्लाहको किताबका ती आयात यसलाई स्पष्ट गर्दछन्, जुन यसभन्दा पूर्व अनाथ बालिकाहरूको विषयमा अवतरित भइसकेका छन् । तात्पर्य सूरः अन-निसाको आयत संख्या तीन छ, जसमा यी मानिसहरूलाई यस अन्यायबाट रोकिएको छ कि उनी अनाथ बालिकाहरूसित तिनीहरूको सुन्दरताको कारण विवाह त गरिहाल्थे तर महर दिनमा आलटाल गर्दथे ।

[3]यसका दुईटा अनुवाद गरिएका छन् । एक त यही हो जुन अनुवादकले गरेको छ, यसमा في (फ़ी) अरबीको शब्द हो, (मूल कथनमा) यस शब्दलाई लोप मानेर अनुवाद गरिएको छ । यसको अर्को अनुवाद عن शब्दलाई लोप गरिएको छ अर्थात् "तिमीलाई उनीसित विवाह गर्नुको कुनै इच्छा नहोस् ।" अतः यो दोस्रो अवस्थाको वर्णन छ कि अनाथ बालिकाहरु

تَقُوْمُوْا لِلْيَتٰمٰى بِالْقِسْطِ ؕ وَمَا تَفْعَلُوْا مِنْ خَيْرٍ فَاِنَّ اللّٰهَ كَانَ بِهٖ عَلِيْمًا ﴿١٢٧﴾

तथा निर्बल बालकहरूको बारेमा पनि यो आदेश छ[1] र यो कि तिमी अनाथहरूको विषयमा न्याय गर ।[2] तथा तिमी जे पनि सत्य काम गर्नेछौ, अल्लाह त्यसलाई राम्ररी जान्दछ ।

وَاِنِ امْرَاَةٌ خَافَتْ مِنْ بَعْلِهَا نُشُوْزًا اَوْ اِعْرَاضًا فَلَا جُنَاحَ عَلَيْهِمَاۤ اَنْ يُّصْلِحَا بَيْنَهُمَا صُلْحًا ؕ وَالصُّلْحُ خَيْرٌ ؕ وَاُحْضِرَتِ الْاَنْفُسُ

(१२८) र यदि कुनै पत्नीलाई आफ्नो पतिको वियोग अथवा विमुखताको भय छ भने दुबैलाई परस्पर सन्धि गर्नमा कुनै दोष छैन ।[3] तथा सन्धि उत्तम छ, प्रलोभन एवं कन्जुसी

कुरूप हुन्छन् अनि त्यसका संरक्षक अथवा त्यसका साथका उत्तराधिकारीमा सम्मिलित अन्य नजिकका सम्बन्धी स्वयं पनि त्योसँग विवाह गर्न चाहँदैन र कुनै अन्य स्थानमा पनि त्यसको विवाह गर्दैन ताकि कोही अन्य उसको सम्पत्तिमा भागीदार नबनोस् । अल्लाह तआलाले पहिलो अवस्थाको जस्तै अत्याचारको यस दोस्रो तरिकालाई पनि मनाही गरेको छ ।

[1]यसको संकेत अनाथ स्त्रीहरूतिर छ । अर्थात् وما يتلى عليكم فى يتامى النساء و فى المستضعفين من الولدان अनाथ बालिकाहरूको विषयमा तिम्रो समक्ष जे पढिन्छ । (सूरः अन-निसा आयत संख्या-३) र निर्बल बालिकाहरूको विषयमा जे पढिन्छ) यसबाट तात्पर्य कुर्आनको आदेश ﴿ يُوْصِيْكُمُ اللّٰهُ فِيْۤ اَوْلَادِكُمْ ﴾ छ जसमा पुत्रहरूकासाथ पुत्रीहरूलाई पनि उत्तराधिकारमा भागीदार बनाइएको छ । जबकि अज्ञानकालमा मात्र ठूला पुत्रहरूलाई उत्तराधिकारी ठानिन्थ्यो, साना निर्बल बालक तथा स्त्रीहरू उत्तराधिकारीबाट वञ्चित थिए, इस्लामी धार्मिक नियमहरूले सबैलाई उत्तराधिकारी बनाए ।

[1]यसको संकेत पनि अनाथ स्त्रीहरूतिर छ । अर्थात् अल्लाहको किताब (कुर्आन करीम) को यो आदेश पनि तिम्रो लागि पढिन्छ कि अनाथहरूसँग न्याय गर, अनाथ बालिकाहरू सुन्दर भएपनि अथवा कुरूप भएपनि दुबै अवस्थामा न्याय गर । (जस्तो कि सविस्तार भइसकेको छ)

[2]पति यदि कुनै कारणवश आफ्नो पत्नीलाई रुचाउँदैन र त्यसबाट दूरी तथा विमुखता र इन्कार नित्यको कर्म बनाइहालेको छ अथवा एकभन्दा अधिक पत्नी भएको अवस्थामा कुनै कम सुन्दर पत्नीसित टाढा रहन्छ भने पत्नी आफ्नो केही अधिकार त्याग गरेर (महरबाट अथवा भरणपोषण अथवा सम्भोग क्रमबाट) पतिसँग सन्धि गरिहालोस्, त यस सन्धिबाट पति-पत्नीलाई कुनै पाप हुनेछैन, किनभने सन्धि प्रत्येक स्थितिमा श्रेष्ठ छ । मोमिनहरूको आमा आदरणीय

الشُّحَّ ؕ وَإِن تُحْسِنُوا وَتَتَّقُوا فَإِنَّ اللَّهَ كَانَ بِمَا تَعْمَلُونَ خَبِيرًا ﴿١٢٨﴾

मनमा स्थित गरिदिइएको छ, र यदि तिमी उपकार गर्दछौ[1] तथा संयम गर्छौ त अल्लाह तिम्रा कृयाकलापबाट सूचित छ ।

وَلَن تَسْتَطِيعُوا أَن تَعْدِلُوا بَيْنَ النِّسَاءِ وَلَوْ حَرَصْتُمْ ۖ فَلَا تَمِيلُوا كُلَّ الْمَيْلِ فَتَذَرُوهَا كَالْمُعَلَّقَةِ ۚ وَإِن تُصْلِحُوا وَتَتَّقُوا فَإِنَّ اللَّهَ

(१२९) तथा तिमी पत्नीहरूबीच कदापि न्याय गर्न सक्ने छैनौं, यद्यपि यसको आकांक्षा राख्दछौ, अतः तिमी (एउटीतिर) पूर्णरूपले एकतर्फी नहोउ कि अर्कोलाई दोधारमा छाडिदेउ[2] र यदि तिमी सुधार गर्दछौ र (अन्यायबाट)

---

सौद: رضى الله عنها ले पनि आफ्नो वृद्धा अवस्थामा आफ्नो क्रम आदरणीय आयशालाई दिनुभएको थियो, जसलाई नवी सल्लल्लाहु अलैहि वसल्लमले स्वीकार गर्नुभएको थियो । (सहीह बुखारी र मुस्लिम किताबुन्निकाह).

[1] شُحّ कंजुसी तथा लालचलाई भन्छन् । यहाँ तात्पर्य आ-आफ्नो स्वार्थ छ, जुन प्रत्येक व्यक्तिलाई आफ्नो कन्जुसी तथा लालचले काम लिन्छ ।

[2] यो एउटा अर्को परिस्थिति हो कि यदि एक व्यक्तिका एकभन्दा बढी पत्नीहरू छन्, त त्यो हार्दिक सम्बन्ध तथा प्रेम सवैसँग एक-प्रकारले राख्न सक्दैन किनभने प्रेम हृदयबाट उत्पन्न हुन्छ, जसमाथि कोही प्रतिवन्ध लगाउन सक्दैन । स्वयं नवी सल्लल्लाहु अलैहि वसल्लमलाई आफ्ना सवै पत्नीहरूमा सबैभन्दा अधिक प्रेम आदरणीय आयशा رضى الله عنها सित थियो । इच्छा उपरान्त न्याय नगर्नुको तात्पर्य यही हार्दिक भावना तथा प्रेममा सामंजस्य नहुनु हो । यदि यो हार्दिक प्रेम सामान्य (वाह्य) अधिकारको समतामा रुकावट नबनोस्, त अल्लाहकहाँ पकड हुने छैन । जुनप्रकारले नवी सल्लल्लाहु अलैहि वसल्लमले अत्याधिक राम्रो नमूना प्रस्तुत गर्नुभएको छ । परन्तु अधिकतर मानिस यस हार्दिक प्रेमको कारण अन्य पत्नीहरूको अधिकारबारे निर्वाह गर्दैनन् र उनीहरूलाई अन्योलमा झुण्ड्याइ दिन्छन्, न उनीहरूलाई तलाक दिन्छन्, र न पत्नीको अधिकार दिन्छन् । यो अत्याधिक अत्याचार हो, जसबाट यहाँ रोकिएको छ र नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि भन्नुभएको छ, जुन व्यक्तिका दुई पत्नी हुन्छन् र त्यो एकैतिर आकर्षित हुन्छ (अर्थात् अर्कोलाई वास्ता गर्दैन) त केयामतका दिन यसप्रकार आउनेछ कि यसको शरीरको एक भाग (अर्थात् आधा) (हुनेछैन । (तिर्मिजी किताबुन् निकाह)

كَانَ غَفُوْرًا رَّحِيْمًا ﴿١٢٩﴾

बच्दछौ भने निःसन्देह अल्लाह क्षमाशील कृपालु छ ।

وَاِنْ يَّتَفَرَّقَا يُغْنِ اللّٰهُ كُلًّا مِّنْ سَعَتِهٖ ؕ وَكَانَ اللّٰهُ وَاسِعًا حَكِيْمًا ﴿١٣٠﴾

(१३०) र यदि दुबै अलग्ग हुन्छन् भने अल्लाह आफ्नो कृपाले दुबैलाई परिपूर्ण गरिदिनेछ,[1] र अल्लाह उदार सर्वज्ञानी छ ।

وَلِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ؕ وَلَقَدْ وَصَّيْنَا الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ مِنْ قَبْلِكُمْ وَاِيَّاكُمْ اَنِ اتَّقُوا اللّٰهَ ؕ وَاِنْ تَكْفُرُوْا فَاِنَّ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ؕ وَكَانَ اللّٰهُ غَنِيًّا حَمِيْدًا ﴿١٣١﴾

(१३१) र आकाशहरू र पृथ्वीमा भएको सबै कुरा अल्लाहकै हो तथा हामीले तिमीभन्दा पूर्वका मानिसहरू जुन किताब (धर्मशास्त्र) दिइएका थिए, उनीहरूलाई र तिमीलाई यही आदेश दिइएका छौं कि अल्लाहसित तर्स र यदि तिमी इन्कार (अस्वीकार) गर्दछौ अथवा मान्दैनौं भने वस्तुतः जे आकाशहरू तथा पृथ्वीमा छ, सबै अल्लाहकै हो तथा अल्लाह निस्पृह प्रशंसित छ ।

وَلِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ؕ وَكَفٰى بِاللّٰهِ وَكِيْلًا ﴿١٣٢﴾

(१३२) र जे-जति पनि आकाशहरू एवं पृथ्वीमा छ सबै अल्लाहकै हो । तथा अल्लाह कार्यसाधकको हैसियतले पर्याप्त छ ।

---

[1]यो तेस्रो अवस्था हो, जबकि प्रयत्न पश्चात यदि निर्वाहको कुनै स्थिति बन्दैन भने, तलाकद्वारा विच्छेदको अधिकार छ । सम्भव छ कि तलाक पश्चात पुरुषलाई इच्छित गुणहरू भएकी पत्नी तथा स्त्रीलाई उसको आवश्यकता अनुसार गुणहरू भएको पुरुष प्राप्त भइहालोस् । इस्लाममा तलाक़लाई अत्याधिक अप्रिय गरिएको छ । एक हदीसमा छ ।

«اَبْغَضُ الْحَلَالِ إِلَى اللهِ الطَّلَاقُ» (तलाक़ वैध त छ तर यस्तो वैध छ जुन अल्लाहलाई अति अप्रिय छ) (अबू दाऊद, मिशकात)

यसको उपरान्त अल्लाहले यसको आज्ञा दिएको छ । यसकारण कि कैयन् पटक परिस्थितिहरूले यस्तो अवस्थामा पुऱ्याइ दिन्छन् कि यसको अतिरिक्त अरु कुनै उपाय हुँदैन र दुवै पक्षको लागि हित यसैमा हुन्छ कि उनी एक-अर्काबाट विच्छेद गरिहालून् । तैपनि वर्णित हदीसबाट यो स्पष्ट हुन्छ कि यो अधिकार त्यसबेला प्रयोग गर्नु पर्दछ जब निर्वाहको कुनै उपाय कुनै प्रकारले पनि देखिंदैन ।

إِنْ يَشَأْ يُذْهِبْكُمْ أَيُّهَا النَّاسُ وَيَأْتِ بِآخَرِينَ ۚ وَكَانَ اللَّهُ عَلَىٰ ذَٰلِكَ قَدِيرًا ﴿١٣٣﴾

(१३३) हे मानिसहरू ! यदि त्यो चाहन्छ भने तिमी सबैलाई हटाईदिन्छ र तिम्रो ठाउँमा अरुलाई ल्याइदिन्छ, अल्लाह यस कुरामा पूर्ण सामर्थ्य राख्दछ ।[1]

مَنْ كَانَ يُرِيدُ ثَوَابَ الدُّنْيَا فَعِنْدَ اللَّهِ ثَوَابُ الدُّنْيَا وَالْآخِرَةِ ۚ وَكَانَ اللَّهُ سَمِيعًا بَصِيرًا ﴿١٣٤﴾

(१३४) जो व्यक्ति सांसारिक प्रतिकार (प्रतिफल) चाहन्छ, त (याद राख कि) अल्लाहसित लोक-परलोक (दुवैको) प्रतिकार उपलब्ध छ[2] तथा अल्लाह सुन्दछ र देख्दछ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا كُونُوا قَوَّامِينَ بِالْقِسْطِ شُهَدَاءَ لِلَّهِ وَلَوْ عَلَىٰ أَنْفُسِكُمْ أَوِ الْوَالِدَيْنِ وَالْأَقْرَبِينَ ۚ إِنْ يَكُنْ غَنِيًّا أَوْ فَقِيرًا

(१३५) हे ईमान भएका ! न्यायमा दृढ रहने तथा अल्लाहको लागि सत्य साक्ष्य दिने बन, यद्यपि त्यो स्वयं तिम्रा आफन्त तथा माता-पिता एवं सम्बन्धिहरूको[3] विरुद्ध हुन्छ, त्यो व्यक्ति धनी भएपनि अथवा निर्धन भएपनि

(उपरोक्त हदीसलाई अल्लामः अलबानीले छीन भन्नुभएको छ हेर्नुस्, इरवाउल ग़लील न. २०४०)

[1]यो अल्लाह तआ़लाको पूर्ण प्रभावी सामर्थ्यको प्रदर्शन हो, जबकि एक अन्य ठाउँमा आदेश गरेको छः

﴿ وَإِنْ تَتَوَلَّوْا يَسْتَبْدِلْ قَوْمًا غَيْرَكُمْ ثُمَّ لَا يَكُونُوا أَمْثَالَكُمْ ﴾

"यदि तिमी मुख फर्काउनेछौ भने त्यसले तिम्रो ठाउँमा अरुहरूलाई ल्याउने छ र उनी तिमीहरू भैं हुने छैनन् ।" (सूरः मोहम्मद-३८)

[2]जस्तै कुनै व्यक्ति धर्मयुद्ध केवल युद्धमा प्राप्त मालको लागि मात्र गर्दछ भने कति मूर्खताको कुरो हो, जबकि अल्लाह तआ़ला संसार र परलोक दुवैको पुण्य प्रदान गर्नुमा सक्षम छ भने उसित एउटै कुरा किन माँग्ने ? मनुष्य दुवै प्राप्त गर्नेवाला किन नबनोस् ?

[3]यसमा अल्लाह तआ़लाले ईमानवालाहरूलाई न्याय स्थापित गर्नु तथा यथार्थ साक्षी दिनुमा जोड दिएको छ । चाहे त्यसको कारण उनलाई स्वयं अथवा माता-पिता तथा सम्बन्धिहरूलाई हानि नै किन सहन नपरोस्, यसकारण कि सत्य सर्वोच्च छ तथा प्रभावशाली छ ।

فَاللّٰهُ اَوْلٰى بِهِمَا فَلَا تَتَّبِعُوا الْهَوٰٓى اَنْ تَعْدِلُوْا ۚ وَاِنْ تَلْوٗٓا اَوْ تُعْرِضُوْا فَاِنَّ اللّٰهَ كَانَ بِمَا تَعْمَلُوْنَ خَبِيْرًا ﴿١٣٥﴾

ती दुबैभन्दा अल्लाहको सम्बन्ध अधिक छ,[1] अत: न्याय गर्नुमा आफ्नो इच्छाको अनुरुप नगर[2] र यदि त्रुटिपूर्ण बयान दिनेछौ अथवा मान्ने छैनौ भने अल्लाह तिम्रा कृयाकलापबाट सूचित छ ।

[1]अर्थात् कुनै धनवान धनको कारण छुट दिइयोस्, र न कुनै निर्धनको निर्धनताको भयले तिमीलाई साँचो कुरो भन्नुबाट रोकोस्, बरु अल्लाह यी दुवैसित तिम्रो धेरै निकट तथा श्रेष्ठ छ ।

[2]अर्थात् मनोकांक्षा धर्माधता अथवा शत्रुता तिमीलाई न्याय गर्नुवाट नरोकोस् । जस्तो अन्य ठाउँमा अल्लाह तआलाको भनाई छ

﴿ وَلَا يَجْرِمَنَّكُمْ شَنَاٰنُ قَوْمٍ عَلٰٓى اَلَّا تَعْدِلُوْا ﴾

"तिमीलाई कुनै क़ौमको शत्रुताले यस कुरोको लागि तैयार नगरिदेओस् कि तिमी न्याय नगर ।" (सूर: अल-मायद:-८)

[3]تلووا शब्द لَيٌّ बाट छ, जुन परिवर्तित गर्ने तथा जानी-जानी झूठो बोल्नुलाई भनिन्छ। अर्थ गवाहीमा परिवर्तन छ। र إعراض (इंकार) सित तात्पर्य साक्ष्य लुकाउनु र नदिनु हो। यी दुवै कुराहरुबाट पनि रोकिएको छ। यस आयतमा न्यायमा जोड र त्यसको लागि जुन कुराको आवश्यकता छ, त्यसको प्रबन्ध गर्नुको आदेश दिएको छ । जस्तै (१) प्रत्येक अवस्थामा न्याय गर, यसबाट कुनै प्रकारले बच्ने चेष्टा नगर, कुनै अपमान अथवा हानिको कारण यसमा रूकावट नआओस्, बरु यसलाई स्थापित गर्नलाई एक-अर्काको सहायक तथा दाहिने हात बन। (२) केवल अल्लाहको प्रसन्नता नै तिम्रो लक्ष्य हुनुपर्छ किनभने यस अवस्थामा तिमी परिवर्तन, कमी अथवा दवाबबाट बच्ने छौ र तिम्रो निर्णय न्यायको तराजूमा पूरा उत्रने छ। (३) न्यायको प्रभाव यदि तिम्रो माता-पिता अथवा कुनै अन्य सम्बन्धीमाथि पनि पर्दछ, तैपनि तिमी चिन्ता नगर। र आफ्नो तथा उनको छुटको सापेक्ष न्यायलाई प्रमुखता देउ। (४) कुनै धनवानको धनको कारण पक्षपात नगर र कुनै निर्धनको निर्धनताबाट नतर्स किनभने त्यही जान्दछ कि यी दुवैको भलाई केमा छ। (५) न्यायमा मनोकांक्षा, कौमी पक्ष तथा शत्रुता वीचमा आउनु हुन्न, वरु यी सबैलाई एकातिर पन्छ्याएर निष्पक्षरूपले न्याय गर।

न्यायको यो प्रवन्ध जुन समाजमा हुनेछ, त्यहाँ शान्ति हुनेछ र अल्लाहको तर्फबाट धन-धान्य र कृपा प्रदान हुनेछ । सहाबा क़राम رضی اللہ عنهم ले यस बिन्दुलाई राम्ररी बुझेका थिए । अत: आदरणीय अब्दुल्लाह बिन रवाह: رضی اللہ عنه को विषयमा भनिन्छ कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले उनलाई

يَـٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ ءَامِنُوا۟ بِٱللَّهِ وَرَسُولِهِۦ وَٱلْكِتَـٰبِ ٱلَّذِى نَزَّلَ عَلَىٰ رَسُولِهِۦ وَٱلْكِتَـٰبِ ٱلَّذِىٓ أَنزَلَ مِن قَبْلُ ۚ وَمَن يَكْفُرْ بِٱللَّهِ وَمَلَـٰٓئِكَتِهِۦ وَكُتُبِهِۦ وَرُسُلِهِۦ وَٱلْيَوْمِ ٱلْـَٔاخِرِ فَقَدْ ضَلَّ ضَلَـٰلًۢا بَعِيدًا ﴿١٣٦﴾

(१३६) हे निष्ठावानहरू ! अल्लाह तथा त्यसका रसूल (सल्लल्लाहु अलैहि वसल्लम) तथा त्यस किताब (पवित्र कुरआन) प्रति जसलाई आफ्नो दूत (सल्लल्लाहु अलैहि वसल्लम) माथि अवतरित गरेको छ तथा ती धर्मशास्त्रहरूप्रति विश्वास गर जुन यसभन्दा पूर्व अवतरित गरिए,[1] र जसले अल्लाह र त्यसका फरिश्ताहरू तथा त्यसका धर्मशास्त्र एवं त्यसका रसूलहरू तथा प्रलय दिवसलाई मानेन त्यो भ्रमित भई धेरै टाढा पुग्न गयो ।

إِنَّ ٱلَّذِينَ ءَامَنُوا۟ ثُمَّ كَفَرُوا۟ ثُمَّ ءَامَنُوا۟ ثُمَّ كَفَرُوا۟ ثُمَّ ٱزْدَادُوا۟ كُفْرًا لَّمْ يَكُنِ ٱللَّهُ لِيَغْفِرَ لَهُمْ وَلَا لِيَهْدِيَهُمْ سَبِيلًۢا ﴿١٣٧﴾

(१३७) नि:सन्देह जसले विश्वास गरे, पछि नकारिदिए, अनि विश्वास गरे अनि फेरि इन्कार (अस्वीकार) गरे तथा इन्कारमा अगाडी बढे, अल्लाह वास्तवमा उनीहरूलाई क्षमा गर्ने छैन र न त सोझो मार्ग देखाउने छ ।[2]

ख़ैबरको यहूदीहरूको पासमा पठाउनु भयो ताकि त्यहाँ गएर फल तथा फसलहरूको अनुमान लगाएर आऊन् । यहूदीहरूले उनलाई रिश्वत (घूस) प्रस्तुत गर्न चाहे ताकि उनी केही कोमलताको व्यवहार गरून् । उहाँले भन्नुभयो, अल्लाहको सौगन्ध, म त्यसद्वारा दूत बनाएर पठाइएको हूँ, जो संसारमा मलाई अधिक प्रिय छ, र तिमी मेरो निकट सबभन्दा अधिक अप्रिय हौ, परन्तु मेरो प्रियको प्रेम तथा तिम्रो शत्रुता मलाई यस कुरोमा प्रेरित गर्न सक्दैन कि म तिम्रो मामिलामा न्याय नगरूँ । यो सुनेर उनले भने यसै न्यायको कारण आकाश र धर्तीको प्रबन्ध स्थापित छ । (तफ़सीर इब्ने क़सीर)

[1]ईमानवालाहरूको लागि ईमान ल्याउनमा जोड, प्राप्त गरिएकोलाई प्राप्त गर्नुको कुरा होइन, वरु ईमानको पूर्ति तथा त्यसमा स्थिर रहने आदेश हो । जस्तै اِهدنا الصراط المُستقيم को अर्थ छ ।

[2]केही व्याख्याकारहरूले यसको तात्पर्य यहूदीहरूसित लिएका छन् । यहूदी आदरणीय मूसालाई विश्वास गरे र आदरणीय उज़ैरको इन्कार गरे, पछि आदरणीय उज़ैरमा विश्वास गरे, त आदरणीय ईसाको इंकार गरिदिए । अनि इन्कारमा अगाडी बढ्दै गए, यहाँसम्मकि परम आदरणीय

بَشِّرِ الْمُنٰفِقِيْنَ بِاَنَّ لَهُمْ عَذَابًا اَلِيْمَا ۙ

(१३८) अवसरवादीहरूलाई सूचित गरिदेउ कि उनका लागि दुखद यातना छ ।

الَّذِيْنَ يَتَّخِذُوْنَ الْكٰفِرِيْنَ اَوْلِيَآءَ مِنْ دُوْنِ الْمُؤْمِنِيْنَ ؕ اَيَبْتَغُوْنَ عِنْدَهُمُ الْعِزَّةَ فَاِنَّ الْعِزَّةَ لِلّٰهِ جَمِيْعًا ۟

(१३९) जो मुसलमानहरूलाई छाडि काफ़िरहरूलाई मित्र बनाउँछन्,[1] के उनीहरू तिनीहरूको पासमा मान-मर्यादा खोज्छन् ? (त स्मरणीय रहोस् कि) सबै मान-सम्मान अल्लाहकै अधिकारमा छ ।[2]

मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको नबूअतको पनि इन्कार गरे । र केहीले यसको तात्पर्य अवसरवादिहरूसित लिएका छन्, किनभने उनको उद्देश्य मुसलमानहरूलाई हानि पुऱ्याउनु थियो, यसकारण पटक-पटक आफूलाई मुसलमान हुनुको आडम्बर रचाउँथे । अन्ततः इन्कार तथा नराम्रो कुरामा यति लिप्त भए कि उनको मार्गदर्शनको आशा नै समाप्त भइहाल्यो ।

[1]जुनप्रकार सूरः अल-बकरःको प्रारम्भमा चर्चित भइसकेको छ कि अवसरवादी काफ़िरहरूका समीप गई यही भन्दछन् कि हामी त वास्तवमा तिम्रै साथमा छौं, र मुसलमानहरूसित त हामी त्यसै उपहास गर्दछौं ।

[2]अर्थात् सम्मान काफ़िरहरूसँग मित्रता तथा प्रेमबाट प्राप्त हुनेछैन, किनभने यो त अल्लाह तआलाको अधिकारमा छ । र त्यो सम्मान आफ्ना भक्तहरूलाई नै प्रदान गर्दछ । अन्य स्थानमा आदेश गर्दछ :

﴿مَنْ كَانَ يُرِيْدُ الْعِزَّةَ فَلِلّٰهِ الْعِزَّةُ جَمِيْعًا ۚ﴾

"जो सम्मानको कामना गर्दछ, (त उसले बुझ्नुपर्छ) कि सम्मान सबै अल्लाहकै लागि हो ।" सूरः अल-फ़ातिर-१०) र आदेश गऱ्यो :

﴿وَلِلّٰهِ الْعِزَّةُ وَلِرَسُوْلِهٖ وَلِلْمُؤْمِنِيْنَ وَلٰكِنَّ الْمُنٰفِقِيْنَ لَا يَعْلَمُوْنَ﴾

"सम्मान अल्लाहकै लागि छ, त्यसको रसूलको लागि छ र ईमानवालाहरूको लागि छ, परन्तु अवसरवादी जान्दैनन् ।" (सूरः अल-मुनाफ़िकून-८)

وَقَدْ نَزَّلَ عَلَيْكُمْ فِي الْكِتٰبِ اَنْ اِذَا سَمِعْتُمْ اٰيٰتِ اللّٰهِ يُكْفَرُ بِهَا وَ يُسْتَهْزَاُ بِهَا فَلَا تَقْعُدُوْا مَعَهُمْ حَتّٰى يَخُوْضُوْا فِيْ حَدِيْثٍ غَيْرِهٖٓ ۖ اِنَّكُمْ اِذًا مِّثْلُهُمْ ۭ اِنَّ اللّٰهَ جَامِعُ الْمُنٰفِقِيْنَ وَالْكٰفِرِيْنَ فِيْ جَهَنَّمَ جَمِيْعَا ۝١٤٠

(१४०) र अल्लाह (तआला) ले तिमीलाई आफ्नो किताब (पवित्र कुरआन) मा यो आदेश उतारेको छ कि जब तिमी अल्लाहका आयतहरूसित इन्कार एवं उपहास भइराखेको सुन्छौ भने उनीसँग त्यस सभामा नबस, जबसम्मकि अरु कुरामा लाग्दैनन्, किनभने यसबेला तिमी उनीहरूकै समान हुनेछौ,[1] निश्चय अल्लाह द्वयवादी एवं काफिरहरू (विश्वासहीन) लाई नरकमा एकत्र गर्नेछ ।

الَّذِيْنَ يَتَرَبَّصُوْنَ بِكُمْ ۚ فَاِنْ كَانَ لَكُمْ فَتْحٌ مِّنَ اللّٰهِ قَالُوْٓا اَلَمْ نَكُنْ مَّعَكُمْ ڮ وَاِنْ كَانَ لِلْكٰفِرِيْنَ نَصِيْبٌ ۙ قَالُوْٓا اَلَمْ نَسْتَحْوِذْ عَلَيْكُمْ وَنَمْنَعْكُمْ مِّنَ الْمُؤْمِنِيْنَ ۭ فَاللّٰهُ يَحْكُمُ بَيْنَكُمْ

(१४१) जो तिम्रो विषयमा प्रतिक्षा गर्दछन्, पुन: यदि तिम्रो विजय अल्लाहको तर्फबाट हुन्छ भने यिनी भन्दछन् कि के हामी तिम्रा साथमा थिएनौं तथा यदि काफिरहरू (विश्वासहीन) लाई अलिकति पनि सफलता प्राप्त हुन्छ भने भन्दछन् कि के हामीले तिमीलाई घेरामा लिएनौं र मुसलमानहरूबाट

---

अर्थात् उनीहरू द्वयवादद्वारा तथा काफिरहरूसित मित्रता गरेर सम्मान प्राप्त गर्न चाहन्छ । वास्तवमा यो चरित्र अपमान तथा अनादरको हो, सम्मानको होइन ।

[1]अर्थात् मनाही गरेपछि यदि तिमी यस्ता सभाहरुमा जहाँ अल्लाहको आयतको उपहास गरिराखेको छ, बस्नेछौ र त्यसलाई रोक्ने छैनौ भने तिमी पनि उनकै समान पापको भागीदार बन्नेछौ । जस्तो कि एक हदीसमा वर्णित छ, "जो व्यक्ति अल्लाह र आखिरतको दिनमा विश्वास राख्दछ, त्यो त्यस भोजमा सम्मिलित नहोस्, जसमा मदिरा पिइन्छ ।" (मुसनद अहमद, भाग १, पृष्ठ २०, भाग ३ पृष्ठ ३३९) यसबाट विदित भयो कि यस्ता सभा समारोहहरुमा सम्मिलित हुनु, जसमा अल्लाह तथा रसूल सल्लल्लाहु अलैहि वसल्लमका आदेशहरूको मौखिक अथवा कर्महरुद्वारा उपहास गरिंदैछ, जस्तो आजकलको सुसभ्य तथा पाश्चात्य देशहरुबाट प्रभावित धनवानको सभामा साधारणत: यस्तो हुन्छ अथवा विवाह एवं जन्मदिवस आदि समारोहमा गरिन्छ । अत:यसप्रकारका सबै वर्णित सभाहरुमा सम्मिलित हुनु महापाप हो ।﴿اِنَّكُمْ اِذًا مِّثْلُهُمْ﴾ को चेतावनी ईमानवालाहरूको भित्र कम्पन उत्पन्न गर्नलाई पर्याप्त छ, यदि हृदयभित्र ईमान छ भने ।

يَوْمَ الْقِيٰمَةِ ۗ وَلَنْ يَّجْعَلَ اللّٰهُ لِلْكٰفِرِيْنَ عَلَى الْمُؤْمِنِيْنَ سَبِيْلًا ﴿١٤١﴾

बचाएनौं ? त प्रलयका दिन[1] अल्लाहले नै तिम्रा बीच निर्णय गर्नेछ[2] तथा अल्लाह कदापि काफ़िरहरूलाई मुसलमानहरूमाथि कुनै मार्ग (प्रभाव) दिने छैन ।

اِنَّ الْمُنٰفِقِيْنَ يُخٰدِعُوْنَ اللّٰهَ وَهُوَ خَادِعُهُمْ ۚ وَاِذَا قَامُوْٓا اِلَى الصَّلٰوةِ

(१४२) नि:सन्देह अवसरवादी अल्लाह (तआला) सित छल गरिराखेका छन्, र त्यसले उनीहरूलाई त्यस छल

[1]अर्थात् हामी तिमीमाथि प्रभावशाली हुन लागेका थियौं, परन्तु तिमीलाई आफ्नो साथी ठानेर छोडिदियौं र मुसलमानहरूको साथ छाडेर हामीले तिमीलाई मुसलमानहरूको चङ्गुलबाट बचायौं अर्थात् यो कि तिमीलाई प्रभाव हाम्रो दोहोरो नीतिको कारण प्राप्त भयो, जुन हामीले मुसलमानहरूमा प्रत्यक्ष रूपले सम्मिलित भई अपनायौं, परन्तु अप्रत्यक्ष रूपले उनीहरूलाई हानि पुऱ्याउनमा हामीले कुनै आलस्य तथा कमी गरेनौं, यहाँसम्मकि तिमी उनीमाथि प्रभावशाली भइहाल्यौ ।

[2]अर्थात् संसारमा त तिमीले छल-कपटबाट सामयिक रूपले केही सफलता प्राप्त गऱ्यौ, परन्तु केयामतका दिन अल्लाह तआलाको निर्णय ती आन्तरिक विचारहरु तथा स्थितिको प्रकाशमा हुनेछ जुनकि तिमीले हृदयमा लुकाएर राखेका थियौ, यसकारण अल्लाह त दिल (मन) का भेदहरुलाई राम्ररी जान्दछ । अनि त्यसमाथि जुन दण्ड त्यसले दिनेछ, त ज्ञात हुनेछ कि संसारमा अवसरवादी नीति अपनाउनुको कारण अत्याधिक हानिको व्यापार गरिएको थियो, जसले गर्दा नरकका थाई यातना भोग्नुपर्ने छ । أعاذنا الله منه "अल्लाहले हामीलाई त्यसवाट आफ्नो शरण देऊन् ।

[3]अर्थात् प्रभुत्व दिने छैन । यसका विभिन्न भावार्थ वर्णित गरिएका छन् । (१) मुसलमानहरूको प्रभाव प्रलयको दिन हुनेछ । (२) तर्क-वितर्कको आधारमा काफ़िर मुसलमानहरूमाथि प्रभावशाली हुन सक्दैनन् । (३) काफ़िरहरूको प्रभाव यसप्रकारको हुनेछन् कि मुसलमानहरूको धन-धान्यको बिल्कुलै अन्त्य भइहालोस् तथा उनी दुनियाँको मानचित्रबाट नै लुप्त भइहालून् । एउटा हदीसबाट पनि यस भावार्थको पुष्टि हुन्छ । (४) जबसम्म मुसलमान अल्लाहको अप्रसन्नता तथा त्यसबाट निषेध गरिएका कर्महरुबाट रोकिइरहन्छन्, काफ़िर उनीमाथि प्रभावशाली हुनसक्ने छैन । इमाम इब्नुल अरबी भन्नुहुन्छ कि "यो सर्वश्रेष्ठ अर्थ हो ।" किनभने अल्लाह तआलाको कथन छ ।

﴿ وَمَآ أَصَٰبَكُم مِّن مُّصِيبَةٍ فَبِمَا كَسَبَتْ أَيْدِيكُمْ ﴾

"र जुन कठिनाई तिमीलाई आउँछ, त्यो तिम्रा कर्महरुको कारण हुन्छ ।" (सूर: अल-शूरा-३०) (फ़तहुल क़दीर)

قَامُوا كُسَالَىٰ يُرَآءُونَ النَّاسَ وَلَا يَذْكُرُونَ اللَّهَ إِلَّا قَلِيلًا ﴿١٤٢﴾

को फल दिने छ ।[1] जब नमाज़मा उभिन्छन् त बडो आलस्यको स्थितिमा उभिन्छन् ।[2] केवल मानिसहरूलाई देखाउँछन् ।[3] र अल्लाहको स्मरण नाम मात्र गर्दछन् ।[4]

مُّذَبْذَبِينَ بَيْنَ ذَٰلِكَ لَآ إِلَىٰ هَٰٓؤُلَآءِ وَلَآ إِلَىٰ هَٰٓؤُلَآءِ

(१४३) उनीहरूमध्यमा नै असमंजस्यमा छन्, न पूर्णरूपले उनीतिर न उचित रूपले

[1]यसको संक्षिप्त विवरण सूर: अल-वक़र:को आरम्भमा भइसकेको छ ।

[2]नमाज़ इस्लामको विशेष स्तम्भ हो र सर्वश्रेष्ठ कर्तव्य हो तथा यसमा पनि उनी ढिलासुस्तीको प्रदर्शन गर्दथे, किनभने उनको पनि हृदय ईमान एवं अल्लाहको भय तथा शुद्धतावाट वञ्चित थियो । यही कारण थियो कि ईशा (रात्रि) तथा फज्र (प्रात:काल) का नमाज़हरु विशेषरूपले उनीमाथि भारी हुने गर्थ्यो । जस्तो कि नवी सल्लल्लाहु अलैहि वसल्लमको पवित्र भनाई छ ।

أثقلُ الصلوٰة علىٰ المنافِقين صلوٰةُ العِشآء وَصلوٰة الفجر

"द्वयवादीहरुमाथि ईशा तथा फज्रको नमाज़ सबभन्दा गाह्रो छ ।"(सहीह वुख़ारी मवाक़ीतुस्सलात र सहीह मुस्लिम किताबुल मसाजिद)

[3]यो नमाज़ पनि उनीहरू आडम्वर तथा देखावटीको लागि पढ्दथे तथा मुसलमानलाई धोखा दिन सकून् ।

[4]अल्लाहको स्मरण नाममात्र गर्दछन् अथवा नमाज़ संक्षिप्त पढ्दछन् قليلة لا يصلون الا صلاة जव नमाज़ शुद्धता एवं अल्लाहको भय, तथा एकाग्रतावाट शून्य हुन्छ त सन्तोषले नमाज़ पढ्नमा कठिनाई हुन्छ । जस्तो कि وانها لكبيرة إلا على الخاشعين (सूर: अल-वक़र:-४५) बाट स्पष्ट छ । हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएको छ, "यो अवसरवादीको नमाज़ हो, कि वसेर सूर्यको प्रतिक्षा गर्दछ, यहाँसम्मकि जव सूर्य शैतानको दुई सिङहरुको बीच (अर्थात् सूर्यास्तको निकट) हुन्छ भने उठ्दछ र चार चोटि चुच्चोले ठुङ्दछ ।" (सहीह मुस्लिम किताबुल मसाजिद र मुअत्ता किताबुल क़ुरआन)

| | |
|---|---|
| यिनैतिर[1] र जसलाई अल्लाह (तआ़ला) मार्ग-विचलित गरिदिन्छ, त तिमी त्यसको लागि कुनै मार्ग पाउने छैनौ । | وَمَن يُضْلِلِ اللَّهُ فَلَن تَجِدَ لَهُ سَبِيلًا ﴿١٤٣﴾ |
| (१४४) हे ईमान भएकाहरू ! निष्ठावानहरूलाई छाडेर काफ़िरहरूलाई मित्र नबनाउ, के तिमी यो चाहन्छौ कि अल्लाहको स्पष्ट तर्क आफ्नो बिरुद्ध जुटाऊ ।[2] | يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَتَّخِذُوا الْكَافِرِينَ أَوْلِيَاءَ مِن دُونِ الْمُؤْمِنِينَ ۚ أَتُرِيدُونَ أَن تَجْعَلُوا لِلَّهِ عَلَيْكُمْ سُلْطَانًا مُّبِينًا ﴿١٤٤﴾ |
| (१४५) अवसरवादी त अवश्य नरकको सबभन्दा तल्लो श्रेणीमा जानेछन् ।[3] र तिमी कदापि उनको कोही सहायक पाउने छैनौ । | إِنَّ الْمُنَافِقِينَ فِي الدَّرْكِ الْأَسْفَلِ مِنَ النَّارِ وَلَن تَجِدَ لَهُمْ نَصِيرًا ﴿١٤٥﴾ |
| (१४६) हो यदि क्षमा माँग्दछन् र सुधार गर्दछन् र अल्लाह (तआ़ला) मा पूर्णविश्वास गर्दछन् र शुद्धरूपले अल्लाहकै लागि धार्मिक कार्य गर्दछन्, त यिनी ईमान भएकाहरू | إِلَّا الَّذِينَ تَابُوا وَأَصْلَحُوا وَاعْتَصَمُوا بِاللَّهِ وَأَخْلَصُوا دِينَهُمْ لِلَّهِ فَأُولَٰئِكَ مَعَ الْمُؤْمِنِينَ ۖ وَسَوْفَ |

[1]काफ़िरहरूका समीप जान्छन् त उनीसँग र जब मुसलमानहरूको पासमा आउँछन् त उनीसँग मित्रता तथा सम्वन्धको प्रदर्शन गर्दछन् । प्रत्यक्ष अथवा अप्रत्यक्ष रूपले उनी न मुसलमानहरूको साथमा छन् र न काफ़िरहरूको साथमा र केही अवसरवादी अविश्वास तथा ईमानको मध्येमा असमंजस्यमा परिराखेका हुन्थे । नबी सल्लल्लाहु अलैहि वसल्लमको कथन छ, "अवसरवादीको तुलना त्यस बाखीको समान छ, जुन गर्भवती हुनको निम्ति दुई बोकाको बीच असमंजस्यमा परिरहन्छे । (बाखाको खोजीमा) कहिले एउटा बोकातिर जान्छ, कहिले अर्को बोकातिर ।" (सहीह मुस्लिम किताबुल मुनाफ़िक़ीन)

[2]अर्थात् अल्लाह तआ़लाले तिमीलाई काफ़िरहरूको मित्रताबाट मनाही गरेको छ । अब यदि तिमी मित्रता गर्छौ भने यसको अर्थ यो हुनेछ कि तिमी अल्लाहलाई यो दलील (तर्फ) उपलब्ध गराइराखेका छौ कि तिमीलाई पनि दण्ड दिन सकोस् । (अर्थात् अल्लाहका आदेशहरुको अवज्ञा तथा विरोधको कारण)

[3]नरकको सबभन्दा निम्न श्रेणी هاوية (हाविय:) भनिन्छ । أعاذنا الله منها अवसरवादिहरूको वर्णित कर्म तथा अवगुणहरुबाट हामी सबै मुसलमानहरूको अल्लाह तआ़लाले रक्षा गरून् ।

يُؤْتِ اللَّهُ الْمُؤْمِنِينَ أَجْرًا عَظِيمًا ﴿١٤٦﴾

का साथमा छन् ।[1] अल्लाह (तआ़ला) निष्ठावानहरूलाई धेरै ठूलो प्रतिफल दिनेछ ।

مَا يَفْعَلُ اللَّهُ بِعَذَابِكُمْ إِنْ شَكَرْتُمْ وَآمَنْتُمْ وَكَانَ اللَّهُ شَاكِرًا عَلِيمًا ﴿١٤٧﴾

(१४७) अल्लाह (तआ़ला) तिमीलाई दण्ड दिएर के गर्छ यदि तिमी कृतज्ञ छौ तथा ईमानका साथ रहन्छौ ?[2] र अल्लाह (तआ़ला) अति सम्मान गर्ने पूर्ण ज्ञाता छ ।[3]

[1]अर्थात् अवसरवादिहरूमध्ये जो यी चार कुराहरूको प्रयोजन गर्नेछ, त्यो नरकमा जानुको सट्टा ईमानवालाको साथमा रहने छ ।

[2]कृतज्ञताको अर्थ हो कि अल्लाहको आदेशानुसार नराम्रो कुराबाट बच्नु तथा सत्कर्मको प्रयोजन गर्नु । यो अल्लाहको कृपाको कर्महरूद्वारा कृतज्ञता व्यक्त गर्नु हो । र ईमानसित तात्पर्य अल्लाह एक हुनु तथा त्यसको प्रभुत्वमा संसारको लागि अन्तिम नवी आदरणीय मुहम्मद मुस्तफ़ा सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा ईमान हो ।

[3]अर्थात् जो उसको कृतज्ञ हुनेछ, त्यसले सम्मान गर्नेछ, जो हृदयदेखि विश्वास गर्नेछ, त्यो यसलाई जानिहाल्नेछ र त्यसको अनुसार सर्वश्रेष्ठ प्रतिफल प्रदान गर्नेछ ।

لَا يُحِبُّ اللّٰهُ الْجَهْرَ بِالسُّوْٓءِ مِنَ الْقَوْلِ اِلَّا مَنْ ظُلِمَ ؕ وَكَانَ اللّٰهُ سَمِيْعًا عَلِيْمًا ﴿١٤٨﴾

(१४८) अल्लाह उच्च स्वरमा नराम्रो कुरा सार्वजनिक रुपले भन्नु माया गर्दैन, परन्तु अत्याचारमा परेकालाई यसको अनुमति छ[1] तथा अल्लाह सर्वश्रोता, सर्वज्ञाता छ ।

اِنْ تُبْدُوْا خَيْرًا اَوْ تُخْفُوْهُ اَوْ تَعْفُوْا عَنْ سُوْٓءٍ فَاِنَّ اللّٰهَ كَانَ عَفُوًّا قَدِيْرًا ﴿١٤٩﴾

(१४९) यदि तिमी कुनै पुण्य काम स्पष्ट रुपमा गर्दछौ अथवा त्यसलाई लुकाउँछौ अथवा कुनै नराम्रो कुरोलाई क्षमा गर्दछौ,[2] त निःसन्देह अल्लाह (तआला) क्षमाशील, सर्वशक्तिमान छ ।

[1]इस्लाम धर्मले यसमा जोड दिएको छ कि कसैमा नराम्रो कुरा देख्दछौ, भने त्यसको चर्चा नगर बरु एकान्तमा उसलाई सम्झाइदेउ, यदि कुनै धार्मिक हित हुन्छ । यसैप्रकार स्पष्टरूपले सबैलाई देखाएर नराम्रो कुरा गर्नु अति अप्रिय छ । एक त नराम्रो काम गर्न त्यसै पनि मनाही गरिएको छ चाहे त्यो पर्दा भित्र नै किन नहोस् । दोस्रो यो कि खुल्लारूपले गरियोस्, यो एउटा अर्को अधिक अपराध हो । र यसको कारण यस नराम्रो कुराको अपराध, दुईगुना, बरु दसगुना पनि हुनसक्दछ । कुरआनका उपरोक्त शब्द दुवै प्रकारका नराम्रो कुराको प्रदर्शनबाट मनाहीमा सम्मिलित छ । र त्यसैमा यो पनि सम्मिलित छ कि कसैले गरेको अथवा नगरेको नराम्रो कुरामा गाली गरियोस् । परन्तु यसबाट अलग्ग यो हो कि कुनै अत्याचारीको अत्याचारलाई मानिसहरूका समक्ष तिमी प्रदर्शित गर्न सक्छौ । त्यसबाट एउटा यो लाभ छ कि संभवतः त्यो अत्याचारबाट रोकिइहालोस् अथवा त्यसको क्षतिपूर्तिको प्रयास गरोस् । दोस्रो लाभ यो हो कि यी मानिस त्यसबाट अलग्ग रहून् । हदीसमा वर्णित छ कि एक व्यक्ति नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भयो र भन्यो कि मेरो छिमेकीले मलाई कष्ट दिन्छ । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "तिमी आफ्ना सामान निकालेर बाटोमा राखिदेउ ।" उसले यस्तै गऱ्यो । अनि त्यहाँबाट जाने जसले पनि सोध्दाखेरि त्यसले आफ्नो छिमेकीको अत्याचारको चर्चा गर्दथ्यो, यो सुनेर हरेक बटुवा त्यसको छिमेकीलाई धिक्कार्थ्यो र गाली गर्थ्यो । छिमेकीले यो देखेर क्षमा माँग्यो र भविष्यमा यस्तो नगर्ने निश्चय गऱ्यो र उसित आफ्नो समान भित्र राख्न प्रार्थना गऱ्यो । (सुनन अबु दाऊद किताबुल अदब)

[2]कुनै व्यक्ति कसैसँग अत्याचार अथवा तिरष्कार गर्दछ भने त्यसलाई त्यसै सीमासम्म प्रतिकारको आज्ञा इस्लाम धर्मले दिएको छ, जुन सीमासम्म त्यसमाथि अत्याचार भएको छ । «الْمُسْتَبَّانِ مَا قَالَا، فَعَلَى الْبَادِىءِ، مَا لَمْ يَعْتَدِ الْمَظْلُومُ»

"गाली-अपशब्द आपसमा गर्ने दुई व्यक्ति जे-जति भन्छन्, त्यसको पाप पहिला गर्ने व्यक्तिमाथि छ । (यदि) जसमाथि अत्याचार गरियो (अर्थात् जसलाई पहिला गाली

(१५०) जुन व्यक्तिहरू अल्लाह तथा त्यसका रसूलहरू (दूतहरु) प्रति अविश्वास गर्दछन् र चाहन्छन् कि अल्लाह तथा त्यसका रसूलहरु (दूतहरु) बीच बिच्छेद गरून् तथा भन्दछन् कि हामी केहीलाई मान्दछौं र केहीलाई मान्दैनौं तथा यस प्रकार चाहन्छन् कि बीचको कुनै मार्ग अपनाऊन ।

إِنَّ الَّذِينَ يَكْفُرُونَ بِاللَّهِ وَرُسُلِهِ وَيُرِيدُونَ أَن يُفَرِّقُوا بَيْنَ اللَّهِ وَرُسُلِهِ وَيَقُولُونَ نُؤْمِنُ بِبَعْضٍ وَنَكْفُرُ بِبَعْضٍ وَيُرِيدُونَ أَن يَتَّخِذُوا بَيْنَ ذَٰلِكَ سَبِيلًا ﴿١٥٠﴾

(१५१) विश्वास गर्नुस, यी सबै अस्वीकार गर्नेहरू हुन् ।[1] र अस्वीकार गर्नेहरूका लागि हामीले अत्याधिक कठोर यातनाहरू तयार गरेका छौं ।

أُولَٰئِكَ هُمُ الْكَافِرُونَ حَقًّا ۚ وَأَعْتَدْنَا لِلْكَافِرِينَ عَذَابًا مُّهِينًا ﴿١٥١﴾

(१५२) तथा जो अल्लाह र त्यसका रसूलप्रति विश्वास गरे तथा उनमा कसैबीच विभेद गरेनन् उनैलाई अल्लाह उनको पूरा

وَالَّذِينَ آمَنُوا بِاللَّهِ وَرُسُلِهِ وَلَمْ يُفَرِّقُوا بَيْنَ أَحَدٍ مِّنْهُمْ أُولَٰئِكَ سَوْفَ يُؤْتِيهِمْ أُجُورَهُمْ ۗ وَكَانَ

---

दिइयो र त्यसले उत्तरमा गाली दियो) अधिकता गर्दैन ।" (सहीह मुस्लिम किताबुल बिर्र वस्सिला वल अदब, हदीस संख्या ४५८७)

तर बदला लिनुको आज्ञाको साथ-साथै क्षमा गर्नलाई श्रेष्ठ भनिएको छ किनभने अल्लाह तआला पूर्ण बदला लिनुमा सक्षम भए उपरान्त क्षमा र माफीले काम लिन्छ । यसकारण आदेश गऱ्यो :

﴿ وَجَزَاءُ سَيِّئَةٍ سَيِّئَةٌ مِّثْلُهَا فَمَنْ عَفَا وَأَصْلَحَ فَأَجْرُهُ عَلَى اللَّهِ ﴾

"तिरस्कारको बदला (प्रतिकार) त्यसको समतुल्य तिरस्कार छ, परन्तु जो क्षमा गरिदिन्छ र सुधार गर्दछ, त त्यसको प्रत्युपकार अल्लाहमाथि छ ।" (सूर: अल-शूर:-४०)

र हदीसमा पनि छ, क्षमा गरिदिनाले अल्लाह तआला सम्मान नै बृद्धि गर्दछ अथवा बढाउँछ । (सहीह मुस्लिम किताबुल बिर्र वससिला वल अदब)

[1]अहले कितावको विषयमा पूर्ण वर्णित भइसकेको छ कि उनीहरू केही नबीहरुलाई मान्दथे र केहीलाई मान्दैनथे । जस्तै यहूदी आदरणीय ईसा तथा परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई मान्दैनथे तथा ईसाई परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई अस्वीकार गर्दथे जस्तो अल्लाह तआलाले भन्नुभयो कि नबीहरू बीच अन्तर गर्नेहरू पक्का अधर्मी हुन् ।

اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ﴿١٥٢﴾

प्रतिफल दिनेछ[1] र अल्लाह क्षमाशील, कृपानिधि छ ।

يَسْـَٔلُكَ اَهْلُ الْكِتٰبِ اَنْ تُنَزِّلَ
عَلَيْهِمْ كِتٰبًا مِّنَ السَّمَآءِ فَقَدْ
سَاَلُوْا مُوْسٰۤى اَكْبَرَ مِنْ ذٰلِكَ
فَقَالُوْۤا اَرِنَا اللّٰهَ جَهْرَةً
فَاَخَذَتْهُمُ الصّٰعِقَةُ بِظُلْمِهِمْ ۚ
ثُمَّ اتَّخَذُوا الْعِجْلَ مِنْۢ بَعْدِ
مَا جَآءَتْهُمُ الْبَيِّنٰتُ فَعَفَوْنَا عَنْ
ذٰلِكَ ۚ وَاٰتَيْنَا مُوْسٰى سُلْطٰنًا
مُّبِيْنًا ﴿١٥٣﴾

(१५३) तपाईंसित अहले किताब यो प्रश्न गर्दछन् कि तपाईं उनीमाथि आकाशबाट कुनै किताब उतार्नुस्[2] त उनीहरूले मूसासित यसभन्दा ठूलो माँग गरेका थिए र भनेका थिए कि हामीलाई प्रत्यक्ष रूपले अल्लाहलाई देखाउ अनि उनीहरूको अत्याचारका कारण उनीहरूलाई बिजुलीले घेरिहाल्यो अनि उनीहरूले स्पष्ट तर्कहरू आइहाले पश्चात बाछोलाई (पूज्य) बनाए र हामीले उनीहरूलाई क्षमा गरिदियौं तथा मूसा (नबी) लाई खुल्ला तर्क दियौं ।

وَرَفَعْنَا فَوْقَهُمُ الطُّوْرَ بِمِيْثَاقِهِمْ
وَقُلْنَا لَهُمُ ادْخُلُوا الْبَابَ سُجَّدًا
وَّقُلْنَا لَهُمْ لَا تَعْدُوْا فِى السَّبْتِ

(१५४) र उनीहरूसित वचन लिनका निम्ति तूरलाई (पर्वत) हामीले उनीमाथि ल्यायौं र उनीहरूलाई आदेश दियौं कि सजदा गर्दै द्वारमा प्रवेश गर र यो पनि आदेश गर्‍यौं कि शनिवारका

[1]यिनीहरूले निष्ठावानहरूको गुण बताए कि उनी सबै नबीहरुमा ईमान राख्दछन्, जुनप्रकारले मुसलमान । यस आयतबाट पनि "सर्वधर्म संभाव" को खण्डन हुन्छ, त्यस विचार भएका निकट मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा ईमान राख्नु आवश्यक छैन र उनी ती गैरमुसलमानहरूलाई पनि मोक्ष प्राप्त गर्ने व्यक्तिहरू ठान्दछन्, जो आफ्नो कल्पना अनुसार अल्लाहमा विश्वास गर्दछन् । परन्तु कुरआनको यस आयतले स्पष्ट गरिदियो कि अल्लाहमा ईमानका साथ-साथ मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा विश्वास गर्नु पनि आवश्यक छ । यदि यस अन्तिम रिसालतमा ईमान छैन भने यस इन्कारको साथ अल्लाहमा ईमान अमान्य तथा अस्वीकार्य छ (हेर्नुस् सूरः अल-बक़र:-आयत ६२ को टिप्पणी)

[2]अर्थात् जुनप्रकार आदरणीय मूसा अलैहिस्सलाम तूर पर्वतमा गए र तख़्तिहरुमा लेखिएको तौरात लिएर आए, त्यसैप्रकार तपाईं आकाशमा गई लेखिएको कुरआन मजीद लिएर आउनुस् । यो माँग मात्र उपद्रव, इन्कार गर्ने तथा ईर्ष्याको आधारमा थियो ।

وَّ اَخَذْنَا مِنْهُمْ مِّيْثَاقًا غَلِيْظًا ﴿١٥٤﴾

दिनको विषयमा उल्लंघन नगर्नु र हामीले उनीसित साह्रै दृढ वचन तथा स्वीकृति लियौं।

فَبِمَا نَقْضِهِمْ مِّيْثَاقَهُمْ وَكُفْرِهِمْ بِاٰيٰتِ اللّٰهِ وَقَتْلِهِمُ الْاَنْۢبِيَآءَ بِغَيْرِ حَقٍّ وَّقَوْلِهِمْ قُلُوْبُنَا غُلْفٌ ؕ بَلْ طَبَعَ اللّٰهُ عَلَيْهَا بِكُفْرِهِمْ فَلَا يُؤْمِنُوْنَ اِلَّا قَلِيْلًا ﴿١٥٥﴾

(१५५) अनि उनीहरूबाट आफ्ना वचन भङ्ग गर्नु र अल्लाहका आयतहरुलाई इन्कार गर्न र रसूलहरुलाई (ईशदूतहरु) नाहक हत्या गर्नाले[1] तथा उनीहरूले यो भन्नाका कारण कि हाम्रा हृदय आवरणहरुमा सुरक्षित छन्,–(होइन) बरु वास्तवमा उनीहरूबाट अस्वीकारका कारण अल्लाहले उनका हृदयमा छाप (ठप्पा) लगाइ दिएको छ, अतः यिनीहरू थोरै नै ईमान राख्दछन्।

وَّبِكُفْرِهِمْ وَقَوْلِهِمْ عَلٰى مَرْيَمَ بُهْتَانًا عَظِيْمًا ﴿١٥٦﴾

(१५६) र उनका अस्वीकारका कारण तथा मरियमका बिरुद्ध यस्ता कुरा गर्नाले जुन एउटा ठूलो लान्छना थियो।[2]

وَّقَوْلِهِمْ اِنَّا قَتَلْنَا الْمَسِيْحَ عِيْسَى ابْنَ مَرْيَمَ رَسُوْلَ اللّٰهِ ۚ وَمَا قَتَلُوْهُ وَمَا صَلَبُوْهُ وَلٰكِنْ شُبِّهَ لَهُمْ ؕ وَاِنَّ الَّذِيْنَ اخْتَلَفُوْا

(१५७) र उनीहरूले यो भन्नुको कारण कि हामीले मसीह, मरियमका पुत्र ईसा, अल्लाहका रसूल (दूत) को हत्या गरिदियौं, जबकि न त उनीहरूले वध गरे न उनीहरूले फाँसी दिए[3] परन्तु उनको निम्ति सरूप बनाइदियौं।[4] विश्वास गर

[1]लिप्त सूत्र यसप्रकार हुनेछ ﴿فَبِمَا نَقْضِهِمْ مِيْثَاقَهُمْ لَعَنّٰهُمْ﴾ अर्थात् हामीले उनीहरूको प्रतिज्ञा भङ्ग तथा अल्लाह तआ़लाका आयतहरुप्रति अविश्वास र नबीहरूको हत्या आदिको कारणले उनलाई धिक्कार अथवा दण्डित गर्‍यौं।

[2]यसवाट तात्पर्य यूसुफ बढईसित आदरणीय मरियमको कुकर्मको आरोप छ। आजकल पनि केही शोधकर्ता यस घोर पाप आरोपलाई एउटा "प्रमाणित तथ्य" सिद्ध गर्न लागेका छन् र भन्दछन् कि यूसुफ बढई (अल्लाहको शरण) ईसाका पिता थिए। र यसप्रकार (आदरणीय) ईसाको बिना पिता चमत्कारी जन्मलाई इन्कार गर्दछन्।

[3]यसबाट स्पष्ट भयो कि यहूदी आदरणीय ईसालाई हत्या अथवा फाँसी दिनमा सफल भएनन्। जस्तो कि सूरः आले-इमरानको आयत संख्या ५५ को टिप्पणीमा संक्षिप्त वर्णन भइसकेको छ।

[4]यसको अर्थ यो हो कि जब आदरणीय ईसालाई यहूदीहरूको योजनाबारे थाहा भयो त उनले आफ्ना अनुयायीहरूलाई, जसको संख्या १२ अथवा १७ थियो, एकत्रित गर्नुभयो र भन्नुभयो कि तिमीहरूमध्ये को मेरो स्थानमा बलि दिन तयार छ? ताकि अल्लाह तआ़ला

فِيهِ لَفِي شَكٍّ مِّنْهُ مَا لَهُم بِهِ مِنْ عِلْمٍ إِلَّا اتِّبَاعَ الظَّنِّ وَمَا قَتَلُوهُ يَقِينًا ﴿١٥٧﴾

कि ईसाको विषयमा मतभेद गर्नेहरू उनको विषयमा शंकामा छन् । उनीहरूलाई अनुमानित कुराहरुमा कार्य गर्नु बाहेक यसको विश्वास छैन ।[1] यति निश्चय छ कि उनीहरूले उनको हत्या गरेनन् ।

بَل رَّفَعَهُ اللَّهُ إِلَيْهِ وَكَانَ اللَّهُ عَزِيزًا حَكِيمًا ﴿١٥٨﴾

(१५८) बरु अल्लाह (तआला) ले उनलाई आफूतिर उठाइहाल्यो ।[2] र अल्लाह बलपूर्वक

उसको रूपरेखा मेरो जस्तो बनाइदेओस् । एउटा नवयुवक यसको निम्ति तयार भयो । अतः आदरणीय ईसा अलैहिस्सलामलाई त्यहाँबाट आकाशमा उठायो, त्यस पश्चात यहूदी आए र उनीहरूले त्यस नवयुवकलाई फाँसीमा झुण्ड्याए, जसलाई ईसाको समरूप बनाइएको थियो । यहूदी यही ठान्दैरहे कि हामीले आदरणीय ईसालाई फाँसीमा झुण्ड्याइदियौं । वास्तविकता यो छ कि आदरणीय ईसा त्यहाँ उपस्थित नै थिएनन्, उनी जीवित शरीर आकाशमा उठाइए । (इब्ने क़सीर तथा फ़तहुल क़दीर)

[1]आदरणीय ईसाको समरूपलाई फाँसी दिए पश्चात एउटा समूहले यो भन्दै गऱ्यो कि आदरणीय ईसाको हत्या गरियो, दोस्रो समूह जसलाई यो अनुमान भइसकेको थियो कि फाँसीमा झुण्ड्याइएको व्यक्ति आदरणीय ईसा होइनन्, कोही अन्य हो, त्यो आदरणीय ईसालाई फाँसीमा झुण्ड्याउनु र हत्या गर्नुबाट इन्कार गर्दैरहयो । केही व्यक्तिहरू भन्दछन् कि उनीहरूले आदरणीय ईसालाई आकाशमा गईराखेको देखेका थिए । अन्य केही भन्दछन् कि यस मतभेदको तात्पर्य त्यो मतभेद हो जुन स्वयं इसाईहरूबीच उत्पन्न भयो । इसाईहरूको नस्तूरी गुटले भन्यो कि ईसा अलैहिस्सलामलाई शारीरिक रूपले फाँसी दिइयो परन्तु आत्मिक रूपले होइन । मलकानिया गुटले भन्यो कि यो हत्या अथवा फाँसी शारीरिक तथा आत्मिक दुबै रुपले पूर्ण भयो । (फ़तहुल क़दीर) अतः त्यो मतभेद, असमंजस्य तथा शंकाको शिकार रहयो ।

[2]यो तथ्य हो कि अल्लाह तआलाले आफ्नो अनन्त सामर्थ्यले आदरणीय ईसालाई जीवित आकाशमा उठायो र निरन्तर सहीह हदीसबाट पनि यस कुराको तर्कसंगत पुष्टि हुन्छ । यी हदीसहरू, हदीसका सबै पुस्तकहरूका अतिरिक्त सहीह बुख़ारी तथा सहीह मुस्लिममा लेखिएका छन् । यी हदीसहरूबाट आकाशमा उठाइनुका अतिरिक्त क़ेयामतभन्दा पूर्व उनी धर्तीमा अवतरित हुने तथा अन्य कुराहरूको वर्णन छ । इमाम इब्ने क़सीर यी कुराहरूको वर्णन गरेर अन्तमा लेख्नु हुन्छ, यद्यपि यी हदीसहरू रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमबाट निरन्तरता प्राप्त छन् । यिनका कथाकार आदरणीय अबू हुरैरा, आदरणीय अब्दुल्लाह बिन मसऊद, उस्मान बिन अबुल आस, अबू ओमामः, नवास बिन समआन, अब्दुल्लाह बिन अमर बिन

पूर्ण ज्ञानी छ ।[1]

(१५९) अहले किताबमध्ये कोही यस्तो शेष छैन होला जसले (आदरणीय) ईसा (अलैहिस्सलाम) को मृत्युभन्दा पूर्व उनीमाथि ईमान स्थापित गरेन ।[2] र प्रलय

وَإِن مِّنْ أَهْلِ الْكِتَٰبِ إِلَّا لَيُؤْمِنَنَّ بِهِۦ قَبْلَ مَوْتِهِۦ ۖ وَيَوْمَ الْقِيَٰمَةِ يَكُونُ عَلَيْهِمْ شَهِيدًا ﴿١٥٩﴾

अल-आस, मुज्जमआ बिन जरिया:, अबी सरिया: तथा हुज़ैफा बिन उसैद (रज़ी अल्लाह अन्हुम) हुन्, यी हदीसहरूमा उहाँको अवतरणको गुण तथा स्थानको वर्णन छ । उहाँ सीरिया देशको वर्तमान राजधानी दमिश्कमा पूर्व-मिनार:को समीप त्यसबेला अवतरित हुनेछन्, जब फ़ज्रको नमाज़को इकामत भइराखेको हुनेछ । उहाँले सुंगुरको हत्या गर्नुहुनेछ, क्रस भाँच्नु हुनेछ, दज्जालको वध पनि आफ्नै हातहरूले गर्नुहुनेछ तथा याजूज र माजूज प्रकट भएर उपद्रव पनि उहाँकै युगमा गर्नेछन् तथा अन्ततः उनको विनाश पनि उहाँको शापले हुनेछ ।

[1]त्यो शक्तिशाली तथा प्रभुत्वशाली छ र त्यसको विचार तथा इच्छालाई कसैले काट्न सक्दैन, र जो उसको शरणमा आउँछ, त्यसलाई कसैले हानि पुऱ्याउन सक्दैन । र त्यो ज्ञानी पनि छ, त्यो जे-जति निर्णय गर्दछ, त्यो नीति र सिद्धान्तमा आधारित हुन्छ ।

[2] قبل موته मा (ه) सर्वनाम केही व्याख्याकारहरूका निकट अहले किताब (इसाईहरू) तिर फर्कन्छ । र अर्थ यो हो कि प्रत्येक इसाई मृत्युको समय आदरणीय ईसामा ईमान त ल्याउँछ । यद्यपि मृत्युभन्दा पहिला ईमानको समय लाभकारी छैन । परन्तु पूर्वजहरू (सहाबा) वा अधिकतर व्याख्याकारहरूको निकट आदरणीय ईसातिर फर्कन्छ र अर्थ यो हो कि जब उनको पुनः संसारमा आगमन हुनेछ र उनले दज्जाललाई वध गरी इस्लाम धर्मको प्रभाव क्षेत्र बढाउनु हुनेछ, त त्यस समय जति पनि यहूदी र ईसाई हुन्छन्, उनलाई पनि वध गर्नेछन् । र यस धर्तीमा मुसलमानहरूबाहेक कोही शेष रहने छैन । यसप्रकार संसारमा जति पनि अहले किताब आदरणीय ईसा अलैहिस्सलाममा ईमान सुदृढ गर्नेछन्, उनी आदरणीय ईसाको मृत्यु पूर्व नै उनमा विश्वास गरी गुज्रिसकेका हुनेछन्, चाहे उनको ईमान कुनै पनि किसिमको होस् । हदीस सहीहबाट यो पनि सिद्ध छ । अतः नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "सौगन्ध छ त्यस शक्तिको जसको हातमा मेरो प्राण छ, अवश्य एक समय आउनेछ जबकि तिम्रो माझमा इब्ने मरियम अधिपत्य तथा न्यायिक बनेर उतर्ने छन्, उनी क्रस भाँच्ने छन्, सुंगुलाई वध गर्ने छन्, रक्षा कर समाप्त गर्नेछन्, र मालको पनि अधिकता हुनेछ कि कोही त्यसलाई लिनेवाला हुनेछैन (अर्थात् दान लिनेवाला कोही हुने छैन) यहाँसम्मकि एउटा सजदा संसार तथा त्यसको ऐश्वर्यभन्दा श्रेष्ठ हुनेछ । अनि आदरणीय अबुहुरैरा رضى الله عنه भन्नुहुन्छ यदि तिमी चाहन्छौ भने कुरआन करीमको यो आयत पढिहाल । ﴿وَإِنْ مِنْ أَهْلِ الْكِتَابِ إِلَّا لَيُؤْمِنَنَّ بِهِ قَبْلَ مَوْتِهِ﴾ (सहीह बुखारी किताबुल अम्बिया)

का दिन उनी तिनीमाथि साक्षी हुनेछन् ।[1]

(१६०) यहूदीहरूको अत्याचारका कारण हामीले उनीहरूको लागि वैध पदार्थ निषेध गरिदियौं तथा उनीहरूले अल्लाहको मार्गबाट अधिक (मानिसहरू) लाई रोक्नको कारण ।[2]

فَبِظُلْمٍ مِّنَ الَّذِينَ هَادُوا حَرَّمْنَا عَلَيْهِمْ طَيِّبَاتٍ أُحِلَّتْ لَهُمْ وَبِصَدِّهِمْ عَن سَبِيلِ اللَّهِ كَثِيرًا ﴿١٦٠﴾

(१६१) र उनीहरूले ब्याज लिनुको कारण जसबाट उनीहरूलाई रोकिएको थियो । तथा मानिसहरूको धन अवैध रूपले लिनका कारण र हामीले उनीहरूमध्ये अस्वीकार गर्नेहरूको लागि दुखद यातना तयार गरेका छौं ।

وَأَخْذِهِمُ الرِّبَا وَقَدْ نُهُوا عَنْهُ وَأَكْلِهِمْ أَمْوَالَ النَّاسِ بِالْبَاطِلِ ۚ وَأَعْتَدْنَا لِلْكَافِرِينَ مِنْهُمْ عَذَابًا أَلِيمًا ﴿١٦١﴾

(१६२) परन्तु उनीहरूमध्ये जो दक्ष तथा ज्ञानी छन्[3] र ईमान भएका छन्, जो त्यसमा विश्वास गर्दछन्, जे तपाईंतिर उतारियो र तपाईंभन्दा

لَّٰكِنِ الرَّاسِخُونَ فِي الْعِلْمِ مِنْهُمْ وَالْمُؤْمِنُونَ يُؤْمِنُونَ بِمَا أُنزِلَ إِلَيْكَ وَمَا أُنزِلَ مِن قَبْلِكَ

यो हदीस यति धेरै पटक आएको छ कि यसलाई निरन्तरताको श्रेणी प्राप्त छ र यिनै निरन्तर हदीसहरूको आधारमा अहले सुन्नतका सबै सम्प्रदायलाई सर्वमान्य विश्वास छ कि आदरणीय ईसा आकाशमा जीवित छन् र प्रलयका समीप उनी संसारमा आउनेछन् र दज्जाल तथा अन्य सबै धर्मलाई समाप्त गर्नेछन् र इस्लाम धर्मलाई प्रभावशाली बनाउने छन् । याजूज व माजूजको उदय पनि आदरणीय ईसाको उपस्थितिमा नै हुनेछ र आदरणीय ईसाको प्रार्थनाको प्रभावले यस अशान्तिको पनि समाप्ति हुनेछ । जस्तो कि हदीसबाट स्पष्ट छ ।

[1]यो गवाही (साक्ष्य) आफ्नो अघिको जीवनसम्मको अवस्थाको विषयमा हुनेछ, जस्तो कि सूरः अल-मायदः को अन्तमा स्पष्ट रूपमा छ ।

﴿ وَكُنتُ عَلَيْهِمْ شَهِيدًا مَّا دُمْتُ فِيهِمْ ﴾

"म जवसम्म उनीहरूबीच उपस्थित रहें, उनीहरूको विषयमा जान्दै गरे ।"

[2]अर्थात् उनीहरूका अपराध तथा कुकर्मका कारण दण्ड स्वरूप धेरैजसो अवर्जित कुरा उनलाई वर्जित गरिएको थियो । (जसको प्रधानता सूरः अल-अनआम-१४६ मा छ)

[3]यसबाट तात्पर्य आदरणीय अब्दुल्लाह बिन सलाम आदि हुन्, जो यहूदीहरू मध्येबाट मुसलमान भएका थिए ।

وَالْمُقِيْمِيْنَ الصَّلٰوةَ وَالْمُؤْتُوْنَ الزَّكٰوةَ وَالْمُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِؕ اُولٰٓئِكَ سَنُؤْتِيْهِمْ اَجْرًا عَظِيْمًا ۧ

पूर्व अवतरित गरियो र विशेषरूपले नमाज़ स्थापित गर्दछन्[1] र ज़कात दिन्छन् ।[2] र अल्लाहमा तथा केयामतका दिनमा विश्वास गर्नेवाला हुन् ।[3] यी त्यसता मानिस हुन्, जसलाई हामीले निकै ठूलो प्रतिकार प्रदान गर्नेछौं ।

اِنَّآ اَوْحَيْنَآ اِلَيْكَ كَمَآ اَوْحَيْنَآ اِلٰى نُوْحٍ وَّالنَّبِيّٖنَ مِنْۢ بَعْدِهٖ ۚ وَاَوْحَيْنَآ اِلٰٓى اِبْرٰهِيْمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ وَيَعْقُوْبَ وَالْاَسْبَاطِ وَعِيْسٰى وَاَيُّوْبَ وَيُوْنُسَ وَهٰرُوْنَ وَسُلَيْمٰنَ ۚ وَاٰتَيْنَا دَاوٗدَ زَبُوْرًا ۚ

(१६३) नि:सन्देह हामीले तपाईंतिर त्यसैप्रकार प्रकाशनाहरू (वह्यी) गरेका छौं, जस्तो कि नूह (अलैहिस्सलाम) र उनी पश्चातका नबीहरूतिर हामीले प्रकाशना (वह्यी) गऱ्यौं, तथा इब्राहीम र इस्माईल र इसहाक़ तथा याकूब तथा उनका सन्तानहरूमाथि तथा ईसा र अय्यूब तथा यूनुस एवं हारून तथा सुलैमानतिर ।[4] र हामीले दाऊद (अलैहिमुस्सलाम) लाई ज़बूर प्रदान गऱ्यौं ।



[1]यिनीबाट तात्पर्य पनि तिनै निष्ठावानहरू हुन्, जो अहले किताबबाट मुसलमान भए अथवा पछि मुहाजिरीन (मक्का शहर छाडेर आएका मुसलमान) तथा अंसार (मदीनाका निवासी मुसलमान) सित तात्पर्य छ । अर्थात् इस्लामी नियमका दृढ ज्ञान राख्नेवाला र उत्तम ईमानबाट अलंकृत हुनेवाला मानिसहरू ती कुकर्महरू गर्नबाट टाढा रहन्छन्, जसलाई अल्लाह तआला अप्रिय ठान्दछ ।

[2]यसको प्रयोजन धनको दान अथवा प्राणको दान अर्थात् आफ्नो आचरण एवं स्वभावलाई पवित्र तथा स्वच्छ गर्नु हो अथवा दुबै अभिप्रेत छन् ।

[3]अर्थात् यसमा विश्वास राख्दछन् कि अल्लाह बाहेक कोही पूज्य छैन तथा मृत्यु पश्चात पुनर्जीवित हुने एवं कर्म अनुसार प्रतिफल प्राप्त हुने कुरोमा विश्वास राख्दछन् ।

[4]आदरणीय इब्ने अब्बास رضی اللہ عنهما बाट उद्धृत छ कि केही मानिसहरूले भनें कि आदरणीय मूसा पश्चात अल्लाह तआलाले कसैमाथि केही अवतरित गरेन र यसप्रकार नबी सल्लल्लाहु अलैहि वसल्लमको रिसालतलाई अस्वीकार गरे, जसमा यो आयत उत्ऱ्यो । (इब्ने क़सीर) जसमा उपरोक्त कथनको खण्डन गर्दै मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) को रिसालतलाई प्रमाणित गरियो ।

(१६४) र तपाईंभन्दा पूर्वका धेरैजसो रसूलहरूका घटना हामीले तपाईंसित वर्णन गरेका छौं ।[1] र धेरैजसो रसूलहरूको गरेका छैनौं[2] पनि र मूसासित अल्लाहले सोझै कुरा गऱ्यो ।[3]

وَرُسُلًا قَدْ قَصَصْنَٰهُمْ عَلَيْكَ مِن قَبْلُ وَرُسُلًا لَّمْ نَقْصُصْهُمْ عَلَيْكَ ۚ وَكَلَّمَ ٱللَّهُ مُوسَىٰ تَكْلِيمًا ﴿١٦٤﴾

(१६५) (हामीले यिनीहरूलाई) शुभ-सूचक एवं सचेतकर्ता रसूल बनायौं ।[4] ताकि रसूलहरू पठाए पश्चात मानिसहरूसित अल्लाह प्रति

رُّسُلًا مُّبَشِّرِينَ وَمُنذِرِينَ لِئَلَّا يَكُونَ لِلنَّاسِ عَلَى ٱللَّهِ حُجَّةٌۢ

[1]जुन रसूलहरूका नाम तथा तिनका घटनाहरु कुरआ़नमा वर्णन गरिएका छन्, तिनको संख्या २५ छ । (१) आदम (२) इदरीस (३) नूह (४) हूद (५) स्वालेह (६) इब्राहीम (७) लूत (८) इस्माईल (९) इसहाक (१०) याकूब (११) यूसुफ (१२) अय्यूब (१३) शोएब (१४) मूसा (१५) हारून (१६) यूनुस (१७) दाऊद (१८) सुलैमान (१९) इलियास (२०) अल-यसअ (२१) ज़करिया (२२) यहिया (२३) ईसा (२४) जुलकिफ़्ल अधिकतर व्याख्याकारहरूका निकट (२५) र आदरणीय मुहम्मद सलवातुल्लाह व सलामुहू अलैहि व अलैहिम अज़मईन ।

[2]जुन नबी र रसूलहरूका नाम तथा घटनाहरु कुर्आनमा वर्णन छैनन्, उनको संख्या कति छ ? अल्लाह तआ़ला नै राम्ररी जान्दछ । एक हदीसमा जुन निकै प्रसिद्ध छ एक लाख चौबीस हजार तथा आदरणीय अल्बानीले एक लाख चौबिस हजारलाई सहीह भन्नुभएको छ । तर यी कथन अत्याधिक कमजोर छन्, कुर्आन र हदीसबाट मात्र यही ज्ञात हुन्छ कि विभिन्न समय तथा अवस्थाहरुमा शुभ-सूचना दिनेवाला तथा सतर्क गर्नेवाला (नबी) आउँदै गरेका छन् । अन्ततः यो नबूअतको क्रम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लममा समाप्त भइहाल्यो । उहाँ सल्लल्लाहु अलैहि वसल्लमभन्दा पूर्व कति नबी आए उनको उचित संख्याको ज्ञान मात्र अल्लाहलाई छ । उहाँ सल्लल्लाहु अलैहि वसल्लम पश्चात जतिपनि मानिसहरू नबूअतको दावी गर्दछन्, ती दज्जाल र झूठा हुन् र उनमा विश्वास गर्नेवाला इस्लामको परिधिभन्दा बाहिर छन् । र मुहम्मद सल्लल्लाहु अलैहि वसल्लको उम्मतबाट अलग एक प्रतिकूल समुदाय छ । जस्तै-बहाई, बाबिया तथा मिर्जाई समुदाय आदि ।

[3]यो मूसा अलैहिस्सलामको विशेष गुण हो, जसमा उनी अन्य नबीहरुभन्दा श्रेष्ठ छन् । सहीह इब्ने हिब्बानमा एउटा कथनको आधारमा इमाम इब्ने कसीरले यस वार्तालापको विशेषतामा आदरणीय आदम तथा आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई सम्मिलित मान्नु भएको छ । तफ़सीर इब्ने कसीर व्याख्या आयत ﴿ تِلْكَ الرُّسُلُ فَضَّلْنَا بَعْضَهُمْ عَلَىٰ بَعْضٍ ﴾

[4]ईमानवालाहरूलाई स्वर्गको सुखको शुभ-सूचना दिनु तथा काफ़िरहरूलाई नरकको कठोर यातनाबाट तर्साउनु ।

بَعْدَ الرُّسُلِ ۗ وَكَانَ اللّٰهُ عَزِيزًا حَكِيمًا ﴿١٦٥﴾

कुनै बहाना तथा अभियोग नरहोस् ।[1] र अल्लाह (तआ़ला) अत्यन्त प्रभुत्वशाली, तत्वदर्शी छ ।

لٰكِنِ اللّٰهُ يَشْهَدُ بِمَآ اَنْزَلَ اِلَيْكَ اَنْزَلَهٗ بِعِلْمِهٖ ۚ وَالْمَلٰٓئِكَةُ يَشْهَدُوْنَ ۗ وَكَفٰى بِاللّٰهِ شَهِيْدًا ﴿١٦٦﴾

(१६६) जे-जति तपाईंतिर अवतरित भएको छ, त्यस विषयमा अल्लाह तआ़ला स्वयं साक्षी छ कि त्यसलाई आफ्नो ज्ञानले अवतरित गरेको छ, र फरिश्ताहरू पनि साक्ष्य (गवाही) दिन्छन् र अल्लाह (तआ़ला) को साक्ष्य पर्याप्त छ ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا وَصَدُّوْا عَنْ سَبِيْلِ اللّٰهِ قَدْ ضَلُّوْا ضَلٰلًا ۢ بَعِيْدًا ﴿١٦٧﴾

(१६७) निःसन्देह जसले अस्वीकार गरे तथा अल्लाहको मार्ग (धर्म) बाट रोके, तिनीहरू पथविचलित भई धेरै टाढा पुगे ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا وَظَلَمُوْا لَمْ يَكُنِ اللّٰهُ لِيَغْفِرَ لَهُمْ وَلَا لِيَهْدِيَهُمْ طَرِيْقًا ﴿١٦٨﴾

(१६८) वस्तुतः जसले कुफ्र गरे तथा अत्याचार गरे, अल्लाह उनीहरूलाई क्षमा गर्ने छैन, न उनीहरूलाई कुनै मार्गको दर्शन गराउनेछ ।[2]

اِلَّا طَرِيْقَ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۗ وَكَانَ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرًا ﴿١٦٩﴾

(१६९) परन्तु नरकको मार्ग, जसमा उनी सधैं निवास गर्नेछन्, तथा यो अल्लाहलाई सरल छ ।

يٰٓاَيُّهَا النَّاسُ قَدْ جَآءَكُمُ

(१७०) हे मानवगण ! तिम्रो पासमा तिम्रो पालनकर्ताको तर्फबाट सत्यमार्ग लिएर रसूल

[1] अर्थात् नबूअत अथवा सावधान गर्ने तथा शुभ-सूचना दिने यो क्रम हामीले यसकारण स्थापित गर्‍यौं कि कसैको पासमा यो तर्क शेष नरहोस् कि हामीलाई त तिम्रो सन्देश पुग्दै पुगेन । जुनप्रकार अन्य स्थानमा आदेश गर्‍यो :

﴿ وَلَوْ أَنَّآ أَهْلَكْنَٰهُم بِعَذَابٍ مِّن قَبْلِهِۦ لَقَالُوا۟ رَبَّنَا لَوْلَآ أَرْسَلْتَ إِلَيْنَا رَسُولًا فَنَتَّبِعَ ءَايَٰتِكَ مِن قَبْلِ أَن نَّذِلَّ وَنَخْزَىٰ ﴾

"यदि हामीले उनलाई पैग़म्बर (पठाउनु भन्दा) पूर्व नै मारिदिएको भए उनीहरू भन्दथे कि हे हाम्रा प्रभु ! तिमीले हामीतिर कुनै रसूल किन पठाएनौं कि हामी अपमानित तथा लज्जित हुनुभन्दा पूर्व नै तिम्रा आयतहरुलाई अनुकरण गरिहाल्थ्यौं ।" (सूरः ताहा-१३४)

[2] किनभने निरन्तर अधर्म तथा अत्याचार गरेर उनीहरूले आफ्ना हृदयलाई कालो बनाइसकेका छन्, जसकारण अब उनको मार्गदर्शन तथा मोक्षको कुनै आशाको किरण देखिँदैन ।

الرَّسُولُ بِالْحَقِّ مِن رَّبِّكُمْ فَآمِنُوا خَيْرًا لَّكُمْ ۚ وَإِن تَكْفُرُوا فَإِنَّ لِلَّهِ مَا فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَكَانَ اللَّهُ عَلِيمًا حَكِيمًا ﴿١٧٠﴾

(मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम) आइपुगे उनीप्रति विश्वास गर तिम्रो लागि उत्तम छ, र यदि तिमीले नकारिदियौ भने आकाशहरु एवं पृथ्वीमा जे-पनि छ अल्लाहकै हो ।[1] तथा अल्लाह ज्ञानी, पूर्ण परिचित छ ।

يَا أَهْلَ الْكِتَابِ لَا تَغْلُوا فِي دِينِكُمْ وَلَا تَقُولُوا عَلَى اللَّهِ إِلَّا الْحَقَّ ۚ

(१७१) हे अहले किताब ! आफ्नो धर्ममा अतिश्योक्ति नगर तथा अल्लाहबारे सत्य नै बोल,

[1]अर्थात् तिम्रो अविश्वासले अल्लाहको के नै बिग्रने छ, जस्तो आदरणीय मूसाले आफ्नो कौमसित भनेका थिए ।

﴿إِن تَكْفُرُوا أَنتُمْ وَمَن فِي الْأَرْضِ جَمِيعًا فَإِنَّ اللَّهَ لَغَنِيٌّ حَمِيدٌ﴾

"यदि तिमी तथा जगतवासी सबै कृतघ्नता गर्दछौ, (त उनीहरू अल्लाहको के बिगाड्ने छन्) अल्लाह निस्पृह प्रशस्त छ ।" (सूर: इब्राहीम-८)

तथा हदीस कुदसीमा छ । अल्लाह भन्दछ कि मेरा भक्तहरू ! यदि तिम्रो प्रथम एवं अन्तिम तथा सबै मानव एवं दानव त्यस एउटा पुरुषको हृदयको समान हुन्छन् जो तिमीमध्ये सबैभन्दा संयमी छ त यसबाट मेरो राज्यमा अधिकता हुनेछैन । तथा यदि तिम्रा पूर्व एवं अन्तिम मानव तथा दानव त्यस एउटा पुरुषको हृदयको समान हुन्छ जो तिमीमा सर्वाधिक अवज्ञा छ, त यसबाट मेरो राज्यमा कुनै कमी हुनेछैन । हे मेरा भक्तहरू ! तिमी सबै एउटा भूमिमा एकत्र भईहाल तथा मसित प्रश्न गर तथा म प्रत्येक पुरुषलाई त्यसको प्रश्नानुसार दिन्छु भने त्यसबाट मेरो कोषमा त्यतिकै कमी हुनेछ जति सूईलाई समुद्रमा चोपेर निकाल्नुबाट समुद्र जलमा हुन्छ । (सहीह मुस्लिम, किताबुल बिर्र)

[2](غلوّ) को अर्थ अतिश्योक्ति (कुनै कुरोलाई बढाई-चढाई वर्णन गर्नु) हो । जस्तै इसाईहरूले आदरणीय ईसा तथा उनकी माताको विषयमा गरे कि उनलाई रिसालत तथा भक्तिको स्थानबाट पूज्यको पदमा आसीन गरिदिए । र उनको अल्लाहलाई जस्तै पूजा गर्न लागे । यसैप्रकार आदरणीय ईसाका अनुयायीहरूको पनि अतिश्योक्ति प्रदर्शन गरेर उनलाई निर्दोष (प्राकृतिक निष्पाप) बनाएर उनलाई निषेध अथवा वैध बनाउने अधिकार दिइहाले । जस्तो कि अल्लाह तआलाले आदेश गरेको छ :

﴿اتَّخَذُوا أَحْبَارَهُمْ وَرُهْبَانَهُمْ أَرْبَابًا مِّن دُونِ اللَّهِ﴾

"उनीहरूले आफ्ना ज्ञानी तथा महात्माहरूलाई अल्लाहको अतिरिक्त आराध्य बनाइहाले ।" (सूर: अल-तौबा-३१)

يَٰأَهْلَ الْكِتَٰبِ لَا تَغْلُوا فِي دِينِكُمْ وَلَا تَقُولُوا عَلَى اللَّهِ إِلَّا الْحَقَّ

वस्तुत: मरियमका पुत्र ईसा मसीह मात्र अल्लाहका दूत एवं शब्द हुन् ।[1] जसलाई मरियमतिर पठाएको थियो तथा उसको तर्फबाट

यो आराध्य बनाउनु हदीस अनुसार उनले मान्य गरिएकोलाई उचित तथा वर्जित गरिएकोलाई निषेध ठान्नु थियो, जबकि वास्तवमा यो अधिकार मात्र अल्लाहलाई छ, परन्तु अहले किताबले यो अधिकार आफ्ना ज्ञानीहरू आदिलाई दिइहाले । अल्लाह तआलाले यी आयतहरुमा अहले किताबलाई धर्ममा यसै अतिश्योक्तिबाट मनाही गरेको छ । नबी सल्ललाहु अलैहि वसल्लमले पनि इसाईहरूको यस अतिश्योक्तिलाई) हेर्दै आफ्नो विषयमा आफ्ना अनुयायीहरूलाई सचेत गर्नुभयो ।

لا تطروني كما أطرت النصارى عيسى ابن مريم ، فإنما أنا عبده، فقولوا : عبد الله و رسوله

"तिमी मलाई त्यसप्रकार सीमाबाट अधिक नबढाउनु जुनप्रकार इसाईहरूले ईसा पुत्र मरियमलाई बढाएका छन्, म त केवल अल्लाहको भक्त हूँ, तसर्थ तिमी मलाई त्यसको भक्त र रसूल नै भन्नू ।" (सहीह बुखारी किताबुल अम्बिया, मुसनद अहमद, भाग १ पृष्ठ २३, तथा हेर्नुस मुसनद अहमद भाग-१ पृष्ठ १५३)

परन्तु अफसोच छ कि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको उम्मत पनि यस उपरान्त यस अतिश्योक्तिबाट सुरक्षित रहन सकेन, जसमा इसाई लीन भए र मुसलमान पनि आफ्नो पैगम्बर अपितु पुनीत भक्तहरूसम्मलाई ईश्वरीय गुणहरुले युक्त गरिदिए, जुन वास्तवमा इसाईहरूको आचरण थियो । यसैप्रकार विद्वान र धर्मशास्त्रीहरू (इस्लामी शोधकर्ताहरू) लाई पनि धर्मको भाष्यकार मान्नुको अतिरिक्त उनलाई धार्मिक नियमहरूलाई बनाउने अधिकार मान्नुको अतिरिक्त उनलाई धार्मिक नियमहरू बनाउने अधिकार दिइहाले । فَإِنَّا لِلَّهِ وَإِنَّا إِلَيْهِ رَاجِعُونَ सत्य भन्नु भएको थियो नबी सल्लल्लाहु अलैहि वसल्लमले ।

لتتبعنَّ سنن من كان قبلكم حذو النعل بالنعل

"जुनप्रकारले एक जुत्ता अर्को जुत्ताको बराबर हुन्छ, बिल्कुल त्यसैप्रकार तिमी बिगत उम्मतहरूको अनुगमन गर्नेछौ ।"

[1]अल्लाहको शब्दको अर्थ यो हो कि शब्द (كُن) (भईहाल) बाट पिता बिना उनको उत्पत्ति भयो । र यो शब्द आदरणीय जिब्रीलद्वारा आदरणीय मरियमसम्म पुऱ्याइयो । अल्लाहको आत्माको अर्थ त्यो फूँक हो, जुन आदरणीय जिब्रीलले अल्लाहको आदेशबाट आदरणीय मरियमको गरेबानमा (कठालो) फुके, जसलाई अल्लाह तआलाले पिताको वीर्यको स्थानमा बनाइदियो । यसप्रकार ईसा अल्लाहका शब्द पनि हुन्, जुन फरिश्ताहरूले आदरणीय मरियमतिर पठाए र त्यसको ती आत्मा हुन् जसलाई लिएर जिब्रील मरियमतिर पठाइए । (तफ़सीर इब्ने कसीर)

وَلَا تَقُولُوا ثَلٰثَةٌ ؕ اِنْتَهُوْا خَيْرًا لَّكُمْ ؕ اِنَّمَا اللّٰهُ اِلٰهٌ وَّاحِدٌ ؕ سُبْحٰنَهٗۤ اَنْ يَّكُوْنَ لَهٗ وَلَدٌ ۘ لَهٗ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ ؕ وَكَفٰى بِاللّٰهِ وَكِيْلًا ﴿١٧١﴾

आत्मा हुन् अतः अल्लाह तथा त्यसका रसूलहरुप्रति विश्वास गर तथा (यो) नभन कि अल्लाह तीन छन्,[1] आफूलाई रोक यो तिम्रो निम्ति भलाईको कुरो हो । वस्तुतः तिम्रो पूज्य मात्र एक अल्लाह छ । त्यो पवित्र छ (यसबाट) कि उसको कोही सन्तान छ उसैको अधिपत्यमा छ, जुन आकाशहरु र पृथ्वीमा छ तथा अल्लाह काम बनाउनको लागि पर्याप्त छ ।

لَنْ يَّسْتَنْكِفَ الْمَسِيْحُ اَنْ يَّكُوْنَ عَبْدًا لِّلّٰهِ وَلَا الْمَلٰٓئِكَةُ الْمُقَرَّبُوْنَ ؕ وَمَنْ يَّسْتَنْكِفْ عَنْ عِبَادَتِهٖ وَيَسْتَكْبِرْ فَسَيَحْشُرُهُمْ اِلَيْهِ جَمِيْعًا ﴿١٧٢﴾

(१७२) मसीह अल्लाहको दास हुनबाट कदापि घृणा गर्दैनन् र न निकटवर्ती फरिश्ताहरू[2] (यसलाई नराम्रो माने) र जो अल्लाहको इबादतबाट घृणा तथा अभिमान गर्नेछ, त्यो (अल्लाह) ती सबैलाई आफूतिर एकत्रित गर्नेछ ।

فَاَمَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فَيُوَفِّيْهِمْ اُجُوْرَهُمْ وَيَزِيْدُهُمْ مِّنْ

(१७३) परन्तु जो निष्ठावान भए एवं सत्कर्म गरे, उनीहरूलाई उनको पूरा प्रतिफल दिनेछ तथा आफ्नो अनुकम्पाले अझै अधिक दिनेछ ।[3]

[1]इसाईहरूका कैयन् गुट छन् । केही आदरणीय ईसालाई, केही अल्लाहको साझेदार र केही अल्लाहको पुत्र मान्दछन् । अनि जो अल्लाह मान्दछन् उनी त्रिमूर्ति (तीन भगवान) का तथा आदरणीय ईसालाई तीनमध्ये एउटा हुने कुरोमा विश्वास गर्दछन् । अल्लाह तआ़ला भनिराखेको छ कि तीन भगवान भन्नुबाट रोक, अल्लाह तआ़ला मात्र एक छ ।

[2]आदराणीय ईसालाई जस्तै केही मानिसहरूले फरिश्ताहरूलाई पनि अल्लाहका साक्षी बनाएका थिए । अल्लाह तआ़ला भनिराखेको छ कि यी सबै अल्लाहका भक्त हुन् र यसबाट उनीहरूलाई कदापि कुनै इन्कार छैन । तिमी उनलाई अल्लाह अथवा त्यसको आराध्यतामा कुनै इन्कार छैन । तिमी उनलाई अल्लाह अथवा त्यसको आराध्यतामा कुन आधारमा मिश्रित गर्दछौ ।

[3]केहीले यस 'अधिक' बाट तात्पर्य यो लिएका छन् कि अल्लाह तआ़ला ईमानवालाहरूलाई शफ़ाअत (अभिस्ताव) को अनुमति प्रदान गर्नेछ, यस शफ़ाअत (अनुशंसा) को अनुमति पाएर जसको लागि अल्लाह चाहने छ, शफ़ाअत गर्नेछन् ।

فَضْلِهٖ ۚ وَاَمَّا الَّذِيْنَ اسْتَنْكَفُوْا وَاسْتَكْبَرُوْا فَيُعَذِّبُهُمْ عَذَابًا اَلِيْمًا ۙ وَّلَا يَجِدُوْنَ لَهُمْ مِّنْ دُوْنِ اللّٰهِ وَلِيًّا وَّلَا نَصِيْرًا ۝

किन्तु जसले घृणा गरे तथा घमण्ड गरे[1] उनीहरूलाई दु:खद यातना दिनेछ।[2] तथा उनी अल्लाहबाहेक आफ्नो निम्ति कोही संरक्षक तथा सहायक पाउने छैनन्।

يٰۤاَيُّهَا النَّاسُ قَدْ جَآءَكُمْ بُرْهَانٌ مِّنْ رَّبِّكُمْ وَاَنْزَلْنَاۤ اِلَيْكُمْ نُوْرًا مُّبِيْنًا ۝

(१७४) हे मानव गण ! तिम्रो समीपमा तिम्रा पालनकर्ताको तर्फबाट तर्क आइसकेको छ।[3] तथा हामीले तिमीतिर ज्वलन्त प्रकाश (पवित्र कुरआन) अवतरित गरेका छौं।[4]

فَاَمَّا الَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَاعْتَصَمُوْا بِهٖ فَسَيُدْخِلُهُمْ فِيْ رَحْمَةٍ مِّنْهُ وَفَضْلٍ ۙ وَّيَهْدِيْهِمْ اِلَيْهِ صِرَاطًا مُّسْتَقِيْمًا ۝

(१७५) अनि जुन मानिसहरू अल्लाहप्रति विश्वास गरे र त्यसलाई दृढताले समाते उनलाई आफ्नो कृपा एवं अनुकम्पामा प्रवेशित गर्नेछ तथा उनीहरूलाई आफूतिर को सत्यमार्ग दर्शाउने छ।

يَسْتَفْتُوْنَكَ ۗ قُلِ اللّٰهُ يُفْتِيْكُمْ فِى الْكَلٰلَةِ ۗ اِنِ امْرُؤٌا هَلَكَ لَيْسَ

(१७६) उनीहरू तपाईंसित प्रश्न गर्दछन्। तपाईं भनिदिनुस् तिमीलाई अल्लाह कलाल:को विषयमा निर्देश

[1]अर्थात् अल्लाहको आराधना र आज्ञा पालनाबाट रोकिरहे र यसबाट इन्कार तथा अहंकार गर्दैरहे।

[2]यसप्रकार अन्य स्थानमा आदेश गऱ्यो:

﴿اِنَّ الَّذِيْنَ يَسْتَكْبِرُوْنَ عَنْ عِبَادَتِيْ سَيَدْخُلُوْنَ جَهَنَّمَ دٰخِرِيْنَ﴾

"नि:सन्देह जो मेरो उपासनाबाट इन्कार तथा घमण्ड गर्दछन्, अवश्य अपमानित तथा लज्जित भई नरकमा प्रवेश गर्नेछन्।" (सूर: अल-मोमिन-६०)

[3]बुरहान, को अर्थ हो यस्तो अकाट्य तर्क, जस पश्चात कसैलाई बहानाको अवसर रहँदैन, यस्तो युक्ति जसबाट हर प्रकारका शंकाहरु समाप्त हुन्छन्, यसैकारण यसलाई अगाडी प्रकाश ज्योति भनिएको छ।

[4]यसबाट तात्पर्य पवित्र कुरआन हो, जुन अविश्वास तथा मिश्रणको अन्धकारमा प्रकाश छ। अपमानको बाङ्गो-टिङ्गो बाटोमा सोझो मार्ग तथा अल्लाह तआलाको सशक्त डोरी हो। अत: यसको अनुसार विश्वास गर्नेवालाहरू अल्लाहको दया एवं कृपाको पात्र हुनेछन्।

لَـهٗ وَلَدٌ وَّلَهٗٓ اُخْتٌ فَلَهَا نِصْفُ مَا تَرَكَ ۚ وَهُوَ يَرِثُهَآ اِنْ لَّمْ يَكُنْ لَّهَا وَلَدٌ ؕ فَاِنْ كَانَتَا اثْنَتَيْنِ فَلَهُمَا الثُّلُثٰنِ مِمَّا تَرَكَ ؕ وَاِنْ كَانُوْٓا اِخْوَةً رِّجَالًا وَّنِسَآءً فَلِلذَّكَرِ مِثْلُ حَظِّ الْاُنْثَيَيْنِ ؕ

गर्दछ[१] कि यदि कुनै पुरुषको मृत्यु हुन्छ तथा त्यसको उत्तराधिकारीमा कोही सन्तान छैन र उसको एक बहिनी छ, त उसको लागि छाडिएको (धन) को आधा छ तथा त्यसको (बहिनी) को उत्तराधिकारी छ यदि उसको कोही सन्तान छैन,[२] यदि दुई बहिनी (दिदीहरू) छन् भने दुबैको लागि दुई तिहाई छ, त्यसमध्ये

[१]कलाल:को विषयमा पहिले वर्णन भइसकेको छ कि त्यस मृतलाई भन्छन्, जसको न पिता छ न पुत्र। यहाँ पुन: त्यसको उत्तराधिकारको चर्चा भइराखेको छ। केहीले कलाल: त्यस व्यक्तिलाई भनेका छन्, जसको केवल पुत्र नहोस् अर्थात् पिता जीवित होस्, परन्तु यो चाहिं सही छैन। कलाल: को प्रथम परिभाषा नै ठीक छ किनभने पिताको उपस्थितिमा बहिनी उत्तराधिकारी हुँदैन। पिता उसको विषयमा बाधक बन्दछ। परन्तु यहाँ अल्लाह तआला भनिराख्नु भएको छ कि यदि उसको एक बहिनी छ भने त तिनी त्यसको आधा धनकी उत्तराधिकारी हुनेछिन्, यसबाट यो संकेत पाईन्छ कि कलाल: त्यो व्यक्ति हो जसको मृत्युको समय पुत्रका साथ-साथै पिता पनि नहोस्। यसप्रकार पिताको अनुपस्थिति सांकेतिकबाट सिद्ध छ।

**टिप्पणी :** पुत्रबाट तात्पर्य पुत्र तथा पौत्र दुबै छन्। यसैप्रकार बहिनीबाट तात्पर्य साखै बहिनी तथा सौतेली बहिनी (पिताको तर्फबाट) छ। (ऐसरुत्तफ़ासीर) हदीसहरुबाट सिद्ध हुन्छ कि बहिनीको साथ-साथै पुत्रीको उपस्थितिमा बहिनीलाई आधा र पुत्रीलाई आधा तथा पौत्रीको उपस्थितिमा पुत्रीलाई आधा पौत्रीलाई छैठौं भाग तथा बहिनीलाई शेष अर्थात् एक-तिहाई दिइयो। (फ़तहुल क़दीर तथा इब्ने क़सीर) यसबाट ज्ञात भयो कि मृतकको सन्तान छ भने बहिनीलाई एक भागीदारको रूपमा केही पनि प्राप्त हुनेछैन। यदि त्यो सन्तान पुत्र छ भने कुनै प्रकारले केही पाइने छैन। र यदि पुत्री छ भने बहिनी अस्बा बनेर साझीदार हुनेछिन्। र शेष लिनेछिन्। यो शेष एक पुत्रीको उपस्थितिमा आधा तथा एकभन्दा अधिकको उपस्थितिमा एक-तिहाई हुनेछ। (अस्बा त्यो हुन्छ जसको भाग निर्धारित नहोस्, किन्तु जसको भाग निर्धारित छ, त्यसबाट जुन शेष बच्छ, त्यसलाई पाओस् तर उनी नभएपछि पुरै धनको अधिकारी बनोस्)

[२]यसैप्रकार पिता पनि नहोस्। यसकारण कि पिता भाईको अपेक्षा निकट छ। पिताको उपस्थितिमा भाई उत्तराधिकारी हुँदैन। यदि त्यस कलाल: स्त्रीको पति अथवा कोही माताबाट जन्म लिएको भाई छ भने तिनको भाग निकाले पश्चात शेष मालको उत्तराधिकारी भाई हुनेछ। (इब्ने क़सीर)

يُبَيِّنُ اللهُ لَكُمْ أَنْ تَضِلُّوا ۗ وَاللهُ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿١٧٦﴾

जुन त्यो छाडेर गएको छ[1] र यदि भाई, बहिनी दुवै छन्, पुरुष पनि स्त्रिहरू पनि भने पुरुषको लागि दुई स्त्रीहरुको बराबर (भाग) छ[2] अल्लाह तिम्रा निम्ति वर्णन गरिराखेको छ ताकि तिमी विचलित न होऊ तथा अल्लाह सर्वज्ञ छ ।

سُورَةُ الْمَائِدَةِ

## सूरतुल् माइदः-५

सूरतुल् माइदः मदीनामा अवतरित भयो, यसमा एक सय बीस आयत र सोह्र रूकूअ छन् ।

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट शुभारम्भ गर्दछु, जो अति कृपालु तथा अति दयालु छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا أَوْفُوا بِالْعُقُودِ ۚ أُحِلَّتْ لَكُمْ بَهِيمَةُ الْأَنْعَامِ إِلَّا مَا يُتْلَىٰ عَلَيْكُمْ غَيْرَ مُحِلِّي

(१) हे निष्ठावानहरू ! बन्धनहरु (वचनहरु) पूरा गर,[3] तिम्रा निम्ति चौपाया पशु वैध गरिएका छन्[4] ती बाहेक जुन पढेर तिमीलाई

[1]यही आदेश दुईभन्दा वढी बहिनीहरू भएको अवस्थामा हुनेछ । अर्थात् यो अर्थ भयो कि कलाल: व्यक्तिका दुईभन्दा वढी दिदी-बहिनीहरू छन् भने उनीहरूलाई सम्पूर्ण मालको तिहाई प्राप्त हुनेछ ।

[2]अर्थात् कलाल:का उत्तराधिकारी मिलेका हुन्, स्त्री-पुरुष दुबै छन् भने एक पुरुष दुई स्त्रीहरूको समानको नियमबाट छाडिएर गएको धनको वितरण हुनेछ ।

[3](عقود) वहुवचन हो (عقد) को, जसको अर्थ गाँठो पार्नु । यसको प्रयोग कुनै वस्तुमा गाँठो पार्नुको लागि पनि हुन्छ र पक्का दृढ वचन गर्नलाई पनि । यहाँ यसबाट तात्पर्य अल्लाहका ती आदेश हुन् जसको पालनाको भार अल्लाह तआलाले मानवमाथि राखेको छ तथा त्यो वचनको तथा सम्बन्ध पनि हो, जुन मनुष्य आपसमा गर्दछन् । दुवैलाई पूरा गर्नु आवश्यक छ ।

[4](بهيمة) चौपाया पशुलाई भनिन्छ । यसको मूल धातु (بَهَم - إبهام) हो । केहीको भनाई छ कि यिनको कुराकानी तथा बुद्धि एवं विवेकमा संदिग्धता छ, यसकारण यिनलाई (بهيمة) भनिन्छ । (أنعام) ऊँट, गाई, बाखा, तथा भेडालाई भनिन्छ किनभने यिनको चालमा कोमलता हुन्छ । यी पालुवा चौपाया पुलिङ्ग तथा स्त्रीलिङ्ग मिलाएर आठ प्रकारका छन्, जसको विस्तृत जानकारी सूरः अल-अन्आमको आयत संख्या १२४ मा आउनेछ । यसका अतिरिक्त जुन पशु जङ्गली कहलाउँछन् । जस्तै हरिण, नीलगाई आदि जसको सामान्यत:

الصَّيْدِ وَأَنْتُمْ حُرُمٌ ۗ إِنَّ اللَّهَ يَحْكُمُ مَا يُرِيدُ ①

सुनाइन्छ[1] तर एहरामको स्थिति मा शिकार नगर, निःसन्देह अल्लाह आफ्नो इच्छाले आदेश दिन्छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تُحِلُّوا شَعَائِرَ اللَّهِ وَلَا الشَّهْرَ الْحَرَامَ وَلَا الْهَدْيَ وَلَا الْقَلَائِدَ وَلَا آمِّينَ الْبَيْتَ الْحَرَامَ يَبْتَغُونَ

(२) हे निष्ठावानहरू ! अल्लाहका धर्म अनुष्ठानहरूलाई निरादर नगर,[2] न आदरणीय महिनाहरूको[3] न बलिको लागि हरमसम्म लागिराखेको तथा पट्टा पहिराइएका पशुहरुको,[4] न आदरणीय

शिकार गरिन्छ । यी पनि उचित छन् । जस्तो कि सूरः अल-बक़रःको आयत संख्या १७३ मा विस्तारपूर्वक वर्णन भइसकेको छ । चुच्चो दाँत भएका ती पशु जो आफ्ना शिकारलाई समातेर चिर्दछन् । जस्तै बाघ, चितुवा, कुकुर, बिरालो, ब्वाँसो आदि चुच्चो दाँतवाला पशु हुन् । त्यो पंक्षी जो आफ्नो शिकार पन्जाले झम्टेर समात्छ जस्तै : शिकरा, शाहीन, बाज, गिद्ध आदि ।

[1]यसको विस्तारपूर्वक वर्णन आयत संख्या ३ मा आइरहेको छ ।

[2](شعائر) बहुवचन हो (شعيرة) को यसबाट तात्पर्य अल्लाहद्वारा निषेधित आदर स्वरुप छ (जसको आदर तथा सम्मान अल्लाहले निर्धारित गरेको छ) । केहीले यसलाई सामान्य रूप राखेका छन्, र केहीका निकट यहाँ हज़ तथा उमरःको धार्मिक रीतिसित तात्पर्य छ । अर्थात् यिनको अनादर तथा अपमान नगर । यसैप्रकार हज़ तथा उमरःलाई पूर्ण गर्नुमा कसैबीच बाधा पनि नबन्नु किनभने यो पनि अनादर हो ।

[3]शहरुल हरामसित तात्पर्य आदरणीय चार महीना (रजब, जुलक़ादा, जुलहिज्जा, तथा मोहर्रम) हुन् । यिनको आदर स्थापित राख र यिनमा हत्या नगर । केहीले यसबाट केवल एक महिना अर्थात् जुलहिज्ज़ाको महिना (हज़को महिना) लिएका छन् । केहीले यस आदेशलाई ﴿فَاقْتُلُوا الْمُشْرِكِينَ حَيْثُ وَجَدْتُمُوهُمْ﴾ बाट निरस्त मानेका छन् । परन्तु यसको आवश्यकता छैन । दुबै आदेशको आ-आफ्नो परिधि छ, जसबाट इंकार छैन ।

[4]हदी यस्तो पशुलाई भनिन्छ, जुन हाजी हरममा बलि दिनका लागि साथमा लैजान्थे । (قلائد) बहुवचन हो (قلادة) को जसलाई घाँटीको पट्टा भनिन्छ, यहाँ हज़को समयमा बलि दिइने ती पशुहरुसित तात्पर्य छ, जसका घाँटीमा चिन्ह तथा पहिचानको निम्ति पट्टा हालिन्छन् । परन्तु (قلائد) सित उद्देश्य तिनै पशु हुन् जसलाई हरम लगिन्छ । यहाँ हदीलाई विशेषरूपले वर्णन गरेर स्पष्ट गरिदिएको छ । अर्थात् यी पशुहरुलाई कसैबाट नखोसियोस् तथा तिनी हरमसम्म पुग्नमा कुनै बाधा नपुर्‍याइयोस् ।

فَضۡلٗا مِّن رَّبِّهِمۡ وَرِضۡوَٰنٗاۚ وَإِذَا حَلَلۡتُمۡ فَٱصۡطَادُواْۚ وَلَا يَجۡرِمَنَّكُمۡ شَنَـَٔانُ قَوۡمٍ أَن صَدُّوكُمۡ عَنِ ٱلۡمَسۡجِدِ ٱلۡحَرَامِ أَن تَعۡتَدُواْۘ وَتَعَاوَنُواْ عَلَى ٱلۡبِرِّ وَٱلتَّقۡوَىٰۖ وَلَا تَعَاوَنُواْ عَلَى ٱلۡإِثۡمِ وَٱلۡعُدۡوَٰنِۚ وَٱتَّقُواْ ٱللَّهَۖ إِنَّ ٱللَّهَ شَدِيدُ ٱلۡعِقَابِ ۝٢

घर (काअ़बा) गैराखेका मानिसहरूको, जो अल्लाहको दया एवं अनुग्रह खोजिराखेका छन्,[1] तथा जब एहराम फुकाउँछौ त शिकार गर्नसक्छौ,[2] तथा जसले तिमीलाई मस्जिदे हरामबाट रोके, उनको शत्रुता तिमीलाई सीमा उल्लंघनमा तैयार नगरोस्,[3] तथा स्वभाव एवं संयममा परस्पर सहायता गर, पाप तथा अत्याचारमा सहायता नगर[4] र अल्लाहसित तर्सिराख, निश्चय अल्लाह कठिन यातना दिनेवाला छ ।

حُرِّمَتۡ عَلَيۡكُمُ ٱلۡمَيۡتَةُ وَٱلدَّمُ وَلَحۡمُ ٱلۡخِنزِيرِ وَمَآ أُهِلَّ لِغَيۡرِ ٱللَّهِ

(३) तिमीलाई निषेध गरिएको छ मुर्दार, तथा रगत, एवं सुँगुरको मासु तथा जसमा

---

[1]अर्थात् हज व उमरःको विचारले अथवा व्यापारको उद्देश्यले हरम जानेहरुलाई नरोक तथा न उनलाई कष्ट देउ । केही व्याख्याकारहरूका निकट यो आदेश त्यस समयको हो जब मुसलमान तथा मूर्तिपूजक एकसाथ हज तथा उमरः गर्दथे । परन्तु जब यो आयत उत्र्यो

﴿إِنَّمَا ٱلۡمُشۡرِكُونَ نَجَسٞ فَلَا يَقۡرَبُواْ ٱلۡمَسۡجِدَ ٱلۡحَرَامَ بَعۡدَ عَامِهِمۡ هَٰذَاۚ﴾

"मूर्तिपूजक त अपवित्र छन्, तसर्थ यस वर्ष पश्चात खाना काअ़बाको निकट जान नपाऊन् ।" (सूरः अल-तौबा-२८)

त मूर्तिपूजकहरूको विषयमा यो आदेश निरस्त भइहाल्यो र यो आदेश मुसलमानहरूको विषयमा छ । (फ़तहुल क़दीर)

[2]यहाँ आदेश कारण बताउनु अर्थात् औचित्य बताउनुको लागि छ । अर्थात् जब एहराम खोलिदिन्छौ, त शिकार गर्नु तिम्रो लागि उचित छ ।

[3]अर्थात् यदि मक्काका मूर्तिपूजकहरूले सन् ६ हिजरीमा मस्जिदे-हराममा प्रवेश गर्नबाट रोक दिएका थिए, परन्तु तिमी तिनको यस रोक्नको कारण उनीसँग अत्याचार तथा दुर्व्यवहारको मार्ग नअप्नाउनु । शत्रुसित पनि ज्ञान तथा क्षमाको पाठ दिइराखिएको छ ।

[4]यो एउटा अति विशेष नियमको वर्णन हो, जुनकि मुसलमानलाई पाइला-पाइलामा मार्गदर्शन गर्न सक्दछ । काश, मुसलमान यस नियमको पालन गर्न सकून् ।

بِهٖ وَ الْمُنْخَنِقَةُ وَالْمَوْقُوْذَةُ وَالْمُتَرَدِّيَةُ وَالنَّطِيْحَةُ وَمَآ اَكَلَ السَّبُعُ اِلَّا مَا ذَكَّيْتُمْ ۣ وَمَا ذُبِحَ عَلَى النُّصُبِ وَ اَنْ تَسْتَقْسِمُوْا بِالْاَزْلَامِ ۭ ذٰلِكُمْ فِسْقٌ ۭ اَلْيَوْمَ يَىِٕسَ الَّذِيْنَ كَفَرُوْا مِنْ دِيْنِكُمْ

अल्लाहको अतिरिक्त अन्यको नाम पुकारिएको छ,[1] तथा घाँटी अठ्याएर मरेको,[2] तथा चोटबाट मरेको,[3] एवं खसेर मरेको[4] तथा अन्य पशुको सींघ हान्नाले मरेको[5] र जसको केही अंश हिंसक जन्तुले खाइसकेको छ[6] परन्तु जसलाई तिमीले वध गऱ्यौ, तथा जो थानहरुमा वध

[1]यहाँबाट ती हराम (प्रतिबन्धित) वस्तुहरूको वर्णन प्रारम्भ हुन्छ, जसको संकेत सूर:को आरम्भ दिइएको छ। आयतको यति भाग सूर: अल-बकर:मा गुज्रिसकेको छ। (हेर्नुस् आयत संख्या १७३)

[2]घाँटी कुनै व्यक्तिले अँठ्याइदेओस् अथवा कुनै कुरोमा अल्झेर स्वयं निस्सासिएर मरेको होस्। दुबै अवस्थामा मृत जनावर हराम छ।

[3]कसैले ढुङ्गा, लठ्ठी अथवा कुनै अन्य कुराले प्रहार गऱ्यो जसबाट त्यो बिना वध (इस्लामी विधि अनुसार घाँटीमा छुरा चलाउनु) बिना वध गरी मरिहाल्यो। अज्ञानकालमा यस्तो जनावरहरूलाई खाइहालिन्थ्यो। इस्लामी धर्म नियमले मनाही गरिदियो।

**बन्दूकको शिकार :** बन्दूकले शिकार गरिएका जनावरहरूका विषयमा आलिमहरू (इस्लामी धर्मगुरु) बीच मतभेद छ। इमाम शौकानीले एक हदीसबाट भावार्थ निकाल्दै, बन्दूकको शिकारलाई उचित मान्नु भएको छ। (फ़तहुल क़दीर) अर्थात् यदि बिस्मिल्लाह पढेर गोली चलाइयो र शिकार वध गर्नुभन्दा पूर्व नै मरिहाल्यो त त्यसलाई खानु यस कथनको आधारमा उचित छ।

[4]चाहे त्यो स्वयं खसेको होस् अथवा कसैले पहाड आदिबाट धक्का दिएर खसालेको होस्।

[5](نطيحة) शब्द (منطوحة) को अर्थमा छ। अर्थात् कसैले त्यसलाई ठक्कर हानिदियो तथा बिना वध गरी त्यो मारिहाल्यो।

[6]अर्थात् बाघ, चितुवा तथा ब्वाँसो आदि जस्तै हिंसक जन्तुले त्यसलाई खाएको होस् तथा त्यो मरेको होस्। अज्ञान कालमा मरे उपरान्त यस्ता जनावरहरूलाई खाईन्थ्यो।

[7]साधारण व्याख्याकारहरूका निकट यो छुट सबै वर्णित जनावरहरूको लागि छ अर्थात् घाँटी अठ्याउनाले चोटद्वारा घाइते, उच्च ठाउँबाट खस्नाले अथवा ठक्करद्वारा अथवा कुनै हिंसक जन्तुद्वारा घाइते भएको जनावर। यदि तिमी यस अवस्थामा पाउँछौ कि तिनमा जीवनको कारण पाइएको छ र अनि तिमी त्यसलाई इस्लामी नियम अनुसार वध गर्दछौ भने तिम्रो लागि खानु उचित हुनेछ।

فَلَا تَخْشَوْهُمْ وَاخْشَوْنِ ۚ الْيَوْمَ أَكْمَلْتُ لَكُمْ دِينَكُمْ وَأَتْمَمْتُ عَلَيْكُمْ نِعْمَتِي وَرَضِيتُ لَكُمُ الْإِسْلَامَ دِينًا ۚ فَمَنِ اضْطُرَّ فِي مَخْمَصَةٍ غَيْرَ مُتَجَانِفٍ لِإِثْمٍ ۙ فَإِنَّ اللَّهَ غَفُورٌ رَحِيمٌ ③

गरिन्छन्[1] तथा पासा (लटरी) द्वारा बाड्नु[2] यो सबै महापाप हो । आज काफ़िर (मूर्तिपूजक) तिम्रो धर्मतिरबाट निराश भए । अतः उनीसित नतर्स मात्र मसित तर्स । आज मैले तिम्रो लागि धर्मलाई परिपूर्ण गरिदिएँ तथा तिमीमाथि आफ्नो अनुकम्पा पूरा गरें र तिम्रो लागि इस्लाम धर्मलाई रुचाएँ ।

जीवनका लक्षण यी हुन् कि वध गर्दाखेरि जनावर छटपटाओस् र खुट्टा बजारोस् । यदि छुरी रेत्दा यो लक्षण प्रदर्शित हुँदैन भने बुझिहाल कि यो मृत छ ।

ज़ब्हको धार्मिक विधि यो हो कि बिस्मिल्लाह पढेर तेज धार वस्तुले उसको घाँटी यसप्रकार काटियोस् कि नसाहरु काटियून् । वधको अतिरिक्त नहर पनि मान्य छ । जसको विधि यो हो कि उभिराखेको जनावरको घाँटीमा छुरा चलाइयोस्[1] (ऊँटलाई नहर गरिन्छ) जसबाट घाँटी र रगतका विशेष नसाहरु काटिन्छन् र सारा रगत बगिहाल्छ ।

[1]मूतिपूजक आफ्ना मूर्तिहरूका निकट पत्थर अथवा कुनै वस्तु गाडेर विशेष स्थान बनाउँछन्, जसलाई थान अथवा आसताना भन्दथे । त्यसैमा मूर्तिहरूको नाममा चढाइएका जनावरहरूको बलि दिन्थे अर्थात् यो ﴿وَمَا أُهِلَّ بِهِۦ لِغَيْرِ اللَّهِ﴾ नै को एउटा रूप थियो । यसबाट ज्ञात भयो कि आसताना, मक़बरा तथा दरगाहहरुमा जहाँ मानिसहरू आफ्नो आवश्यकताको पूर्तिको लागि जान्छन्, र त्यहाँ गाडिएको व्यक्तिको प्रसन्नताको लागि जनावरहरू (कुखुरा, खसी, बोका आदि) को बली दिन्छन् अथवा पकाएको खाना बाँड्छन्, उनलाई खानु वर्जित छ यो (وما ذبح على النصب) मा आउँछ ।

[2] ﴿وَأَن تَسْتَقْسِمُوا﴾ का दुईटा अर्थ गरिएका छन्, एक तीरद्वारा बाँड्नु, दोस्रो तीरद्वारा भाग्य पत्ता लगाउनु । पहिलो अर्थको विषयमा भनिन्छ कि जुवा आदिमा बधित गरिएका जनावरहरूलाई बाँड्नका निम्ति यी तीर हुन्थे, जसमा कसैलाई केही प्राप्त हुन्थ्यो, कोही बञ्चित रहन्थ्यो । दोस्रो अर्थको अनुसार भनिएको छ कि (أزلام) सित तात्पर्य तीर हुन्, जसद्वारा कुनै कुराको प्रारम्भ गर्नुभन्दा पूर्व भाग्य विचार गर्दथे । उनीहरूले तीन प्रकारका तीर बनाएका हुन्थे । एक (गर), दोस्रो (नगर), तथा तेस्रोमा केही पनि हुन्नथ्यो । (गर) वाला तीर निस्कँदा काम गर्थे । (नगर) वाला तीर निस्कँदा गर्दैनथे र तेस्रो तीर निस्कँदा फेरि विचार गर्दथे । यो पनि एक ज्योतिष तथा अल्लाहको अतिरिक्त अन्यसित माँग्नुको मार्गको एउटा रूप हो, यसकारण यसलाई पनि वर्जित गरियो । (استقسام) को अर्थ नै भाग्य पत्ता लगाउनु हो । अर्थात् तीरहरुद्वारा भाग्यको विषयमा जान्ने प्रयत्न गर्दथे ।

परन्तु जो भोकले व्याकूल हुन्छ र कुनै पाप गर्न चाहँदैन, निश्चय अल्लाह क्षमाशील, कृपानिधि छ ।[1]

(४) उनी तपाईंसित प्रश्न गर्दछन् कि उनको लागि के (खानु) वैध छ ? तपाईं भनिदिनुस् कि तिम्रा निम्ति पवित्र कुरा उचित छन्[2] तथा ती शिकारी जनावर जुनकि तिमीले सिकाएर राखेका छौ जसलाई केही कुरा सिकाउँदछौ, जुनकि अल्लाहले तिमीलाई सिकायो[3] त यदि तिम्रो लागि तिनी (शिकार) समात्छन् र त्यसलाई छाड्दा त्यसमाथि अल्लाहको नाम लिन्छौ भने त्यसलाई (शिकार लाई) खाउ[4] तथा अल्लाहसित तर्स, निःसन्देह अल्लाह शीघ्र हिसाब लिनेवाला छ ।

يَسْـَٔلُونَكَ مَاذَآ أُحِلَّ لَهُمْ ۖ قُلْ أُحِلَّ لَكُمُ ٱلطَّيِّبَٰتُ ۙ وَمَا عَلَّمْتُم مِّنَ ٱلْجَوَارِحِ مُكَلِّبِينَ تُعَلِّمُونَهُنَّ مِمَّا عَلَّمَكُمُ ٱللَّهُ ۖ فَكُلُوا۟ مِمَّآ أَمْسَكْنَ عَلَيْكُمْ وَٱذْكُرُوا۟ ٱسْمَ ٱللَّهِ عَلَيْهِ ۖ وَٱتَّقُوا۟ ٱللَّهَ ۚ إِنَّ ٱللَّهَ سَرِيعُ ٱلْحِسَابِ ④

[1]यो भोकको व्याकुलताको परिस्थितिमा वर्जित खानेकुराको अनुमति हो, तर यसबाट अल्लाहको अवज्ञा तथा सीमा उल्लंघनको विचार नहोस्, केवल प्राण रक्षाको उद्देश्य होस् ।

[2]यसबाट ती सबै कुराको तात्पर्य हो जुन उचित छन् । प्रत्येक उचित पवित्र छ र वर्जित अपवित्र छ ।

[3](جارح) को बहुवचन (جوارح) हो, जो अरुहरूको लागि शिकारका निम्ति हुन्, जसको तात्पर्य शिकारी कुत्ता, बाज, चितुवा, शिकंरा तथा अन्य शिकारी पंक्षी तथा हिंसक पशु हुन् । (مكلبين) को अर्थ हो शिकारका लागि छोड्नुभन्दा पूर्व उनलाई शिकारको लागि सिकाइएको होस्, सिकाउनुको अर्थ हो कि जब त्यसलाई शिकारको लागि छाडिन्छ, तब दगुर्दै जाओस्, जब रोकिन्छ तब रुकिहालोस्, बोलाएपछि फर्किहालोस् ।

[4]यस्ता सिकाइएका जनावरहरूको शिकार गरिएको जनावर दुई प्रतिबन्धहरूका साथ वैध छ । एक यो कि त्यसलाई शिकारको लागि छोड्दाखेरि बिस्मिल्लाह पढियोस् । दोस्रो यो कि शिकारी जनावर शिकार गरेर आफ्नो मालिकको लागि राखिछाडोस् र त्यसको प्रतिक्षा गरोस्, स्वयं नखाओस् । यद्यपि उसले त्यसलाई मारिहालेको छ, तैपनि त्यो मृतक शिकार गरिएको जनावर उचित हुनेछ, जबकि उसको शिकारको लागि सिकाइएको तथा छाडेको जनावरको अतिरिक्त अन्य जनावर सम्मिलित नहोस् । (सहीह बुख़ारी, किताबुज़्ज़बाएहे वस्सैदे र मुस्लिम किताबुस्सैदे)

اَلْيَوْمَ اُحِلَّ لَكُمُ الطَّيِّبٰتُ ؕ وَطَعَامُ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ حِلٌّ لَّكُمْ ۪ وَطَعَامُكُمْ حِلٌّ لَّهُمْ ۫ وَالْمُحْصَنٰتُ مِنَ الْمُؤْمِنٰتِ وَالْمُحْصَنٰتُ مِنَ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ مِنْ قَبْلِكُمْ اِذَاۤ اٰتَيْتُمُوْهُنَّ اُجُوْرَهُنَّ مُحْصِنِيْنَ غَيْرَ مُسٰفِحِيْنَ وَلَا مُتَّخِذِيْۤ اَخْدَانٍ ؕ وَمَنْ يَّكْفُرْ بِالْاِيْمَانِ فَقَدْ حَبِطَ عَمَلُهٗ ۫ وَهُوَ فِى الْاٰخِرَةِ مِنَ الْخٰسِرِيْنَ ۟

(५) आज सबै पवित्र वस्तुहरू तिम्रा लागि विधि अनुकूल गरिए तथा अहले किताबको खाद्य तिम्रो लागि बैधानिक छ[1] तथा तिम्रो खाद्य उनको लागि विधि अनुकूल (जायज़) छ तथा सत्यव्रता मुसलमान स्त्रीहरू पनि र जो तिमीभन्दा पूर्व किताब (धर्मशास्त्र) दिइए, तिनीहरू मध्येबाट सत्यव्रता नारीहरूलाई पनि[2] जब तिमीले उनीहरूलाई उनको विवाह मूल्य (महर) दिइसकेका छौ त निकाहमा ल्याऊ न त यो काम स्वच्छन्द काम तृप्तिका लागि होस न प्रेमिका बनाउनलाई तथा जसले ईमानलाई नकारिदियो, उसको कर्म व्यर्थ भयो तथा त्यो परलोकमा घाटामा रहनेछ ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اِذَا قُمْتُمْ اِلَى الصَّلٰوةِ فَاغْسِلُوْا وُجُوْهَكُمْ

(६) हे ईमानवालाहरू ! जब तिमी नमाजको लागि उभिन्छौ त आफ्नो मुख, तथा कुहिनोहरूसहित

[1]अहले किताबलाई त्यही वध गरिएको पशु उचित हुनेछ, जसको रक्त बगिसकेको हुनेछ । अर्थात् उनलाई मेसिनद्वारा वध उचित छैन किनभने यसमा रगत बग्नु आवश्यक छ, जुनकि यसमा पाइँदैन ।

[2]अहले किताबका स्त्रीहरूका साथ विवाहको अनुमतिको साथमा एक त सुचरित्रता सतीत्व आवश्यक छ, जुनकि आजकल अधिकतर अहले किताब स्त्रीहरूमा पाइँदैन । दोस्रो त्यस पश्चात यो भनिएको छ कि जसले ईमानका साथ कुफ्र गऱ्यो, त्यसको कर्म नष्ट भइहाल्यो । यसबाट यो चेतावनी दिनुछ कि यदि यस्तो स्त्रीसँग विवाह गर्नाले ईमान नष्ट हुने कुरोको भय छ भने यो साह्रै हानिकारक व्यापार हो । र आजकल अहले किताबका स्त्रीहरूसित विवाह गर्नुमा ईमानलाई जुन खतरा छ, त्यसको वर्णनको आवश्यकता छैन । यसको उद्देश्य यो हो कि ईमानलाई बचाउनु अनिवार्य छ । एउटा अनुमति पूर्ण कार्यको लागि अनिवार्यलाई खतरामा पार्न सकिन्न । यसकारण यसको औचित्य त्यसबेलासम्म अनुचित रहनेछ, जबसम्म यी दुवै उपरोक्त कमीहरु त्यसबाट समाप्त हुँदैनन् । यसका अतिरिक्त आजकलका अहले किताब आफ्नो धर्मबाट बिल्कुल अज्ञान वरु विमुख एवं विद्रोही छन् । यी परिस्थितिहरुमा के वास्तवमा उनको गणना अहले कितावमा पनि हुनसक्दछ ? (والله أعلم)

وَاَيْدِيَكُمْ اِلَى الْمَرَافِقِ وَامْسَحُوْا بِرُءُوْسِكُمْ وَاَرْجُلَكُمْ اِلَى الْكَعْبَيْنِ ۭ وَاِنْ كُنْتُمْ جُنُبًا فَاطَّهَّرُوْا ۭ وَاِنْ كُنْتُمْ مَّرْضٰٓى اَوْ عَلٰي سَفَرٍ اَوْ جَاۗءَ اَحَدٌ مِّنْكُمْ مِّنَ الْغَاۗىِٕطِ اَوْ لٰمَسْتُمُ

आफ्ना हातहरुलाई धुने गर[1] र आफ्नो टाउकोको मसह (दुबै हात भिजाएर टाउकोमा स्पर्श गर्नु) गर[2] तथा आफ्ना खुट्टाको गोली गाठो समेत धोउ,[3] र यदि तिमी अपवित्र छौ भने स्नान गर[4] र यदि तिमी रोगी अथवा यात्रामा

[1]"मुख धोउ।" अर्थात् एक-एक, दुई-दुई, अथवा तीन-तीन पटक दुई हात नाडीसम्म धुनु, कुल्ला गर्ने नाकमा पानी हालेर सफा गरे पश्चात जस्तो कि हदीसबाट सिद्ध छ। मुख धोए पश्चात हातहरुलाई कुहिनाहरुसम्म धोइयोस्।

[2]मसह (अर्थात् दुबै हात भिजाएर टाउकोमा अगाडीबाट पछाडीसम्म स्पर्श गर्नु) पुरै टाउकोमा गरियोस् जस्तो कि हदीसबाट सिद्ध छ "आफ्नो हात अगाडीबाट पछाडी (पश्चात मस्तक) सम्म लगियोस् र फेरि वापस त्यहाँबाट अगाडी ल्याइयोस् जहाँबाट प्रारम्भ गरिएको थियो।" यसैको साथ कानहरुको मसह गरियोस्। यदि टाउकोमा फेटा अथवा जस्तै अन्य केही कुरा होस् त हदीसका अनुसार मोजाहरुको जस्तै त्यसमा पनि मसह उचित छ। (सहीह मुस्लिम, किताबुत्तहारः) यसप्रकार एकपटक मसह गरिहाल्नु पर्याप्त छ।

[3](أرجلكم) को सम्बन्ध (وجوهكم) सित छ अर्थात् आफ्नो खुट्टा, गोलीगाँठोसम्म धोउ तथा यदि मोजाहरु तथा यसप्रकारका अन्य वस्त्र खुट्टामाथि लगाइएका छन् भने (जबकि वजूको अवस्थामा लगाएको होस्) सहीह हदीसका अनुसार खुट्टा धुनुको सट्टा मोजाहरु आदिमा मसह गर्नु उचित छ।

**टिप्पणी :** (१) यदि पहिलेदेखि वजू छ भने नयाँ वजू गर्नु आवश्यक छैन, परन्तु प्रत्येक नमाज़को लागि नयाँ वजू गर्नु राम्रो हो। (२) वजूभन्दा पहिला नीयत अनिवार्य छ। (३) वजूभन्दा पूर्व बिस्मिल्लाह पढ्नु आवश्यक छ। (४) दाढ़ी बाक्लो छ भने त्यसको ख़िलाल (कपालहरुमा औंला फेर्नु काईयोले कोरे जस्तै) गरियोस्। (५) अङ्गहरूलाई क्रमानुसार धोइयोस्। (६) तिनका मध्ये ढिलो नगरियोस्। अर्थात् एक अङ्गलाई धोए पश्चात दोस्रो अङ्गलाई धुनुमा विलम्ब नगरियोस्। वरु सबै अङ्गहरूलाई क्रमानुसार एकपछि अर्कोलाई धोइयोस्। (७) वजू गरिनेवाला अङ्गका भागहरुमा कुनै पनि भाग सुख्खा नरहोस्, अन्यथा वजू पूर्ण हुनेछैन। (८) कुनै पनि अङ्ग तीन पटकभन्दा बढी (तर टाउकाको मसह मात्र एक पटक गरिन्छ) नधोइयोस्। यस्तो गर्नु सुन्नतको विपरीत छ। (तफ़सीर इब्ने कसीर, फ़तहुल क़दीर तथा ऐसरुत्तफासीर)

[4]अपवित्रतासित तात्पर्य त्यो अपवित्रता हो, जुन स्वप्नदोष अथवा स्त्री अथवा पत्नीसँग संभोगको कारण हुन्छ। र यसै आदेशाधानमा मासिक धर्म तथा प्रसव रक्त पनि छ। मासिक धर्म तथा प्रसव रक्त रोकिए पश्चात पवित्रताको लागि स्नान गर्नु अनिवार्य छ। परन्तु पानी उपलब्ध नभएको स्थितिमा तयम्मुमको अनुमति छ। (फ़तहुल क़दीर तथा ऐसरुत्तफ़ासीर)

ٱلنِّسَآءَ فَلَمْ تَجِدُوا۟ مَآءً فَتَيَمَّمُوا۟ صَعِيدًا طَيِّبًا فَٱمْسَحُوا۟ بِوُجُوهِكُمْ وَأَيْدِيكُم مِّنْهُ ۚ مَا يُرِيدُ ٱللَّهُ لِيَجْعَلَ عَلَيْكُم مِّنْ حَرَجٍ وَلَٰكِن يُرِيدُ لِيُطَهِّرَكُمْ وَلِيُتِمَّ نِعْمَتَهُۥ عَلَيْكُمْ لَعَلَّكُمْ تَشْكُرُونَ ۝٦

छौ अथवा तिमीमध्ये कोही शौच गरेर आएको अथवा तिमी पत्नीलाई सम्पर्क गरेको अवस्था होस् र पानी छैन भने पवित्र माटोले तयम्मुम गर, त्यसलाई आफ्ना हात तथा अनुहारमा दल[1] अल्लाह तिमीलाई अप्ठ्यारोमा पार्न चाहन्न[2] परन्तु तिमीलाई पवित्र बनाउन चाहन्छ र ताकि तिमीमाथि आफ्नो पूरा कृपा गरोस्[3] र ताकि तिमी कृतज्ञ रह ।

وَٱذْكُرُوا۟ نِعْمَةَ ٱللَّهِ عَلَيْكُمْ وَمِيثَٰقَهُ ٱلَّذِى وَاثَقَكُم بِهِۦٓ إِذْ قُلْتُمْ سَمِعْنَا وَأَطَعْنَا ۖ وَٱتَّقُوا۟ ٱللَّهَ ۚ إِنَّ ٱللَّهَ عَلِيمٌۢ بِذَاتِ ٱلصُّدُورِ ۝٧

(७) तथा आफूमाथि अल्लाहको कृपा तथा त्यस प्रतिज्ञालाई स्मरण गर जसको तिमीबाट पुष्टि गरायो जब तिमीले भन्यौ कि हामीले सुन्यौं र मान्यौ तथा अल्लाह (तआला) सित तर्सदैं गर । निःन्देह अल्लाह (तआला) हृदयहरुका कुराको जानकार (अन्तर्यामी) छ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ كُونُوا۟ قَوَّٰمِينَ لِلَّهِ شُهَدَآءَ بِٱلْقِسْطِ ۖ

(८) हे ईमान भएकाहरू ! अल्लाहको लागि सत्यमा दृढ, न्यायमा साक्षी होउ[4] तथा कुनै कौमका

[1]यसको संक्षिप्त व्याख्या तथा तयम्मुमको विधि सूरः अल-निसाको आयत संख्या ४३ मा आइसकेको छ । सहीह बुख़ारीमा यसको अवतरणको विषयमा वर्णन छ कि एक यात्रामा बैयदा नामक स्थानमा आदरणीय आयशाको हार हराइहाल्यो । जसको कारण रुक्नु पर्‍यो अथवा रोकिरहनु पर्‍यो । बिहानको नमाज़को लागि मानिसहरूको पासमा पानी थिएन र खोजे पश्चात पानी पाइएन । त्यसबेला यो आयत उत्र्यो जसमा तयम्मुमको आज्ञा दिइयो । आदरणीय उसैद बिन हुजैरले आयत सुनेर भन्नुभयो हे अबूबक्र ! तिम्रो कारण अल्लाहले मानिसहरूको लागि सुविधाहरु उतार्‍यो र यो तिम्रो कारण कुनै प्रथम सुविधा होइन । (तिमी मानिसहरूको लागि पूर्ण विभूति हौ) (सहीह बुख़ारी तफ़सीर सूरः अल-माइदः)

[2]यसैले तयम्मुमको अनुमति प्रदान गरेको छ ।

[3]यसैकारण हदीसमा वुजू गरे पश्चात दुआ गर्नुमा जोड दिइएको छ । दुआ (प्रार्थनाहरु) को किताबबाट यो दुआ कण्ठ गरिहाल्नुस् ।

[4]पहिलो वाक्यको व्याख्या सूरः अल-निसा आयत संख्या १३५ तथा दोस्रो वाक्यको सूरः अल-माइदः को प्रारम्भमा आइसकेको छ । नबी करीम सल्लल्लाहु अलैहि वसल्लमको निकट

وَلَا يَجْرِمَنَّكُمْ شَنَاٰنُ قَوْمٍ عَلٰٓى اَلَّا تَعْدِلُوْا ؕ اِعْدِلُوْا ۫ هُوَ اَقْرَبُ لِلتَّقْوٰى ۫ وَاتَّقُوا اللّٰهَ ؕ اِنَّ اللّٰهَ خَبِيْرٌۢ بِمَا تَعْمَلُوْنَ ⑧

शत्रुता तिमीलाई न्याय नगर्नुमा तत्पर (तयार) नगरोस् न्याय गर त्यो संयमसित निकटतम् छ तथा अल्लाहसित तर्स वस्तुत: अल्लाह तिम्रा कर्महरुबाट सूचित छ ।

وَعَدَ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ ۙ لَهُمْ مَّغْفِرَةٌ وَّاَجْرٌ عَظِيْمٌ ⑨

(९) जसले विश्वास गरे तथा सदाचार गरे अल्लाहले उनलाई क्षमा एवं ठूलो प्रतिफलको वचन दिएको छ ।

وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَآ اُولٰٓئِكَ اَصْحٰبُ الْجَحِيْمِ ⑩

(१०) र जसले विश्वास गरेन तथा हाम्रा आदेशहरुलाई झूठा भने, ती नै नरकका पात्र हुन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اذْكُرُوْا نِعْمَتَ اللّٰهِ عَلَيْكُمْ اِذْ هَمَّ قَوْمٌ اَنْ يَّبْسُطُوْٓا اِلَيْكُمْ اَيْدِيَهُمْ فَكَفَّ اَيْدِيَهُمْ عَنْكُمْ ۚ وَاتَّقُوا اللّٰهَ ؕ

(११) हे निष्ठावानहरू ! अल्लाह (तआ़ला) ले जुन उपकार तिमीमाथि गर्नु भएको छ, त्यसलाई स्मरण गर, जबकि एउटा जातिले तिमीमाथि अत्याचार गर्न चाहयो, त अल्लाह (तआ़ला) ले तिनका हातहरुलाई तिमीसम्म पुग्नबाट रोकिदियो ।[1] र

न्यायिक साक्ष्यको कति महत्व छ, यसको आभास त्यस घटनाबाट हुन्छ जुन हदीसमा वर्णित छ कि आदरणीय नौमान बिन बशीर (अल्लाह उनीसित प्रसन्न भयो) भन्नुहुन्छ कि मेरो पिताले मलाई केही अनुदान दिनुभयो त मेरी आमाले भन्नुभयो कि यस उपहारमा जबसम्म तपाईं अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लमको साक्ष्य बनाउनु हुन्न, म सन्तुष्ट हुनेछैन । अत: मेरो पिता नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित हुनुभयो त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, के तिमीले आफ्ना सबै सन्तानलाई अनुदान दिएका छौ ? तब उहाँले नकारात्मक उत्तर दिनुभयो त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, अल्लाहसित तर्स ! र सन्तानबीच न्याय गर । र भन्नुभयो, म अत्याचारमा साक्षी बन्ने छैन । (सहीह बुख़ारी तथा मुस्लिम, किताबुल हिबा)

[1]यसको अवतरणको विशेषताको लागि व्याख्याकारहरूले विभिन्न घटनाहरुको वर्णन गरेका छन् । जस्तै त्यस गवाँरको घटना, कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम एक यात्राबाट फर्कंदाखेरि एउटा रुखमुनि विश्राम गर्न थाल्नुभयो । तलवार वृक्षमा झुण्डिराखेको थियो । त्यस गवाँरले त्यो तरवार समातेर उहाँमाथि फर्काउँदै भन्यो, हे "मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) ! तपाईंलाई मबाट कसले बचाउने छ ?" उहाँ सल्लल्लाहु अलैहि वसल्लमले बिना अप्ठ्यारो मानी

وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ﴿١١﴾

अल्लाह (तआ़ला) सित तर्सिराख तथा निष्ठावानहरूलाई अल्लाह तआ़लामा नै भरोसा गर्नु पर्दछ।

وَلَقَدْ اَخَذَ اللّٰهُ مِيْثَاقَ بَنِيْٓ اِسْرَآءِيْلَ ۚ وَبَعَثْنَا مِنْهُمُ اثْنَيْ عَشَرَ نَقِيْبًا ۭ وَقَالَ اللّٰهُ اِنِّىْ مَعَكُمْ ۭ لَىِٕنْ اَقَمْتُمُ الصَّلٰوةَ وَاٰتَيْتُمُ

(१२) र अल्लाह तआ़लाले इस्राईलका पुत्रहरुबाट वचन लियो।[१] र तिनै मध्येबाट बाह्र सरदार (नायक) हामीले नियुक्त गऱ्यौं।[२] र अल्लाह (तआ़ला) ले भन्नुभयो म निःसन्देह तिम्रो

उत्तर दिनुभयो, अल्लाह (अर्थात् अल्लाह बचाउनेछ) यो भन्नु के थियो कि तरवार त्यसको हातबाट खसिहाल्यो। केहीको भनाई छ कि क़ाअब बिन अशरफ र त्यसका साथीहरूले नबी करीम सल्लल्लाहु अलैहि वसल्लम र उहाँका सहचरहरूको विरुद्ध, जबकि उहाँ त्यस ठाउँमा विराजमान थिए। धोका तथा छलबाट हानि पुऱ्याउने षड्यन्त्र रचेका थिए, जसबाट अल्लाह तआ़लाले उहाँलाई बचाउनु भयो। केही भन्दछन् कि एक मुसलमानको हातबाट दुई अमिरी व्यक्तिको हत्या भ्रान्तिको कारण भइहालेको थियो। तिनको दायतको आपूर्तिमा यहूदीहरूका क़बीला बनू नजारसित सन्धि अनुसार जुन सहयोग लिनु थियो, त्यसको आपूर्तिको लागि नबी करीम सल्लल्लाहु अलैहि वसल्लम स्वयं आफ्ना साथीहरू सहित त्यहाँ पाल्नुभयो र एक पर्खालसित अडेस लगाएर बसिहाल्नु भयो। उनीहरूले यो षड्यन्त्र रचे कि माथिबाट जाँतोको पत्थर उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि खसालियोस्, जसलाई अल्लाह तआ़लाले वह्यी (प्रकाशना) द्वारा उहाँलाई अवगत गराइदियो। सम्भवतः यी सबै घटनाहरु पश्चात यो आयत उत्रेको हुनसक्छ किनभने एक आयतको अवतरणका कैयन् कारण तथा परिस्थितिहरु हुन सक्दछन्। (तफ़सीर इब्ने क़सीर, ऐसरुत्तफ़ासीर, र फ़तहुल क़दीर)

[१]जब अल्लाह तआ़लाले ईमानवालाहरूलाई त्यो वचन पूरा गर्न भन्यो, जुन उसले उनीसित परम आदरणीय मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमद्वारा लिइयो र उनीहरूलाई सत्यको स्थापना तथा न्यायिक साक्ष्यको आदेश दियो र उनीहरूलाई ती पुरस्कारको स्मरण गरायो जुन उनीमाथि प्रत्यक्ष तथा गोप्य रूपबाट भयो तथा विशेषरुपले यो कुराको उनीहरूलाई सत्य तथा सोझो मार्गमा हिंड्ने अवसर प्रदान गऱ्यो, तसर्थ अब यस स्थानमा त्यस वचनको वर्णन गरिंदैछ, जुन इस्राईलको सन्तानबाट लिइयो र जसमा उनीहरू असफल रहे। यो मानौं उनको माध्यमबाट मुसलमानहरूलाई चेतावनी दिइराखिएको छ कि तिमी पनि कहीं इस्राईलको सन्तान जस्तै वचन भङ्ग प्रारम्भ नगर्नु।

[२]यो त्यसबेलाको घटना हो, जब आदरणीय मूसा जबाबरः सित युद्धको लागि तयार भए, तब उनले आफ्नो समुदायका बाह्र जातिहरुका बाह्र संरक्षक नियुक्त गरिदिए ताकि उनीहरू उनलाई युद्धको लागि तयार पनि गरून्, तथा अगुवाई पनि गरून् एवं अन्य विषयहरुको व्यवस्था पनि गरून्।

الزَّكٰوةَ وَاٰمَنْتُمْ بِرُسُلِيْ وَعَزَّرْتُمُوْهُمْ وَاَقْرَضْتُمُ اللّٰهَ قَرْضًا حَسَنًا لَّاُكَفِّرَنَّ عَنْكُمْ سَيِّاٰتِكُمْ وَلَاُدْخِلَنَّكُمْ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۚ فَمَنْ كَفَرَ بَعْدَ ذٰلِكَ مِنْكُمْ فَقَدْ ضَلَّ سَوَآءَ السَّبِيْلِ ﴿١٢﴾

साथमा छु, यदि तिमी नमाज़ स्थापित राख्नेछौ, र ज़कात दिंदैगर्नेछौ र मेरा रसूलहरूलाई मान्दै रहनेछौ र उनको सहायता गर्दैरहनेछौ र अल्लाह (तआ़ला) लाई श्रेष्ठ ऋण दिंदै गर्नेछौ, त निःसन्देह म तिम्रा नराम्रा कुरा तिमीबाट टाढा राख्नेछु र तिमीलाई ती स्वर्गमा लैजानेछु जसमुनि नहर बगिराखेका छन् । अब यस वचन पश्चात पनि तिमीमध्ये जो इन्कार गर्दछ, त्यो निःसन्देह सोझो मार्गबाट विचलित भयो ।

فَبِمَا نَقْضِهِمْ مِّيْثَاقَهُمْ لَعَنّٰهُمْ وَجَعَلْنَا قُلُوْبَهُمْ قٰسِيَةً ۚ يُحَرِّفُوْنَ الْكَلِمَ عَنْ مَّوَاضِعِهٖ ۙ وَنَسُوْا حَظًّا مِّمَّا ذُكِّرُوْا بِهٖ ۚ

(१३) अनि उनीहरूबाट वचन भङ्ग गर्नुको कारण हामीले उनीहरूलाई धिक्कार्यौं र उनका हृदय कठोर गरिदियौं कि उनी शब्दहरुलाई तिनका त्यस स्थानबाट परिवर्तित गरिदिन्छन् ।[1] र जे-जति शिक्षा उनलाई दिइयो त्यसको निकै ठूलो भाग

[1]अर्थात् यति प्रबन्ध तथा वचनको उपरान्त पनि इस्राईलका सन्तानले वचन भङ्ग गरे, जसका कारण उनीहरू अल्लाहको धिक्कारका पात्र भए । यस धिक्कारको सांसारिक परिणाम यो भयो कि उनका हृदय कठोर गरिए, जसबाट तिनका हृदय प्रभावित हुनबाट बञ्चित भइहाले तथा नबीहरुका भाषण तथा शिक्षाहरु उनका लागि बेकार भइहाले । दोस्रो यो कि उनीहरू अल्लाहका धर्मशास्त्रहरुमा परिवर्तन गर्नथाले । यो परिवर्तन शाब्दिक तथा भाष्य दुबै रूपमा हुन्थे जुन यस कुराको प्रमाण हुन्थ्यो कि उनको बुद्धिमा कमी आइहालेको छ । र उनको अवज्ञामा पनि अत्याधिक बृद्धि भइहाल्यो कि अल्लाहका आयतहरुमा हस्तक्षेप गर्नुमा पनि उनीहरूलाई संकोच भएन । दूर्भाग्यले यस हार्दिक कठोरता तथा अल्लाहको कथनमा परिवर्तन गर्नुबाट उम्मते मुस्लिमा पनि सुरक्षित रहेन । मुसलमान कहलाउने सामान्य व्यक्तिहरू मात्र होइन, विशिष्ट व्यक्ति पनि यस्ता ठाउँमा पुगिसकेका छन् कि शिक्षा तथा अल्लाहका आदेशहरुलाई स्मरण गराउन अलिकति पनि प्रभाव उनको हृदयमा पर्दैन, सबैथोक उनको लागि बेकार छ । तथा जुन आलस्य तथा कमीहरुको उनी शिकार छन्, तिनलाई स्वीकार पनि गर्दैनन् । यसैप्रकार आफ्नो मार्मिक धार्मिक नियमहरुमा नयाँ कुराहरुलाई रचिहाल्नु तथा आफ्नो वैचारिक कथनको पक्षको लागि उनलाई अल्लाहको कथनमा परिवर्तन गर्नुमा पनि कुनै रोक छैन । उनीहरू आवश्यकतानुसार निर्भाकतापूर्वक यो काम पनि गरिहाल्छन् ।

وَلَا تَزَالُ تَطَّلِعُ عَلَىٰ خَائِنَةٍ مِّنْهُمْ إِلَّا قَلِيلًا مِّنْهُمْ فَاعْفُ عَنْهُمْ وَاصْفَحْ إِنَّ اللَّهَ يُحِبُّ الْمُحْسِنِينَ ﴿١٣﴾

बिर्सिदिए ।[1] उनको एक न एक विश्वासघातको सूचना तिमीलाई प्राप्त भइरहने छ ।[2] परन्तु थोरै (मानिसहरू) यस्ता छैनन् पनि ।[3] तैपनि उनीहरूलाई क्षमा गर्दै जाउ र छोड्दै जाउ ।[4] निःसन्देह अल्लाह तआला उपकार गर्नेवालाहरूलाई मित्र बनाउँछ ।

وَمِنَ الَّذِينَ قَالُوا إِنَّا نَصَارَىٰ أَخَذْنَا مِيثَاقَهُمْ فَنَسُوا حَظًّا مِّمَّا

(१४) र जो आफूलाई ईसाई भन्दछन् ।[5] हामीले उनीसित (पनि) वचन लिएका थियौं, उनीहरूले पनि

[1]यो तेस्रो परिणाम हो र यसको अर्थ यो हो कि अल्लाहको आदेशानुसार कार्य गर्नुसित उनीहरूलाई कुनै रूचि तथा इच्छा रहेन, बरु अकर्मण्य तथा कुकर्म उनको विशेषता बनिहालेको थियो एवं उनी नीचताको त्यस स्थानमा पुगिहाले कि न त उनका हृदय नै सही रहे र न प्रकृति नै ।

[2]अर्थात् विद्रोह, विश्वासघात तथा पाखण्ड उनका चरित्र बनिहाले जसको नमूना हर समय तपाईंका समक्ष आइराख्ने छन् ।

[3]यी थोरै मानिसहरू ती नै हुन्, जो यहूदीहरू मध्येबाट मुसलमान भइहालेका थिए र उनको संख्या दसभन्दा पनि कम थियो ।

[4]क्षमा गर्न तथा अनदेखि गर्नुको आदेश त्यसबेला दिइयो, जब युद्धको आज्ञा थिएन । पछि त्यसको स्थानमा आदेश दिइयो ।

﴿ قَٰتِلُوا الَّذِينَ لَا يُؤْمِنُونَ بِاللَّهِ وَلَا بِالْيَوْمِ الْآخِرِ ﴾

"तिनीहरूसित युद्ध गर, जो अल्लाहमा तथा आख़िरतको दिनमा ईमान राख्दैनन् ।" (अत्तौबा-२९)

केहीका निकट क्षमा तथा त्यागको आदेश निरस्त भएको छैन । यो स्वयं एक विशेष आदेश हो, स्थिति तथा समय अनुसार त्यसलाई पनि अपनाउन सकिन्छ तथा त्यसबाट कैयन् पटक त्यो परिणाम प्राप्त हुन्छन्, जसको लागि युद्धको आदेश छ ।

[5](نصارى) शब्दको उद्गम (نصرة) बाट भएको हो, जसको अर्थ छ "सहायता गर्नु ।" यो आदरणीय ईसाको प्रश्न ﴿ مَنْ أَنصَارِي إِلَى اللَّهِ ﴾ अल्लाहको धर्ममा मेरो को सहायक छ ? को जवाफमा उनका केही निःस्वार्थी अनुयायीहरूले उत्तर दिएका थिए ﴿ نَحْنُ أَنصَارُ اللَّهِ ﴾ "हामी अल्लाहको लागि सहायता गर्नेवाला छौं ।" यसैबाट यो लिइएको छ । यिनी पनि यहूदीहरू जस्तै अहले किताब हुन् ।

ذَكِّرُوا بِهٖ ۚ فَأَغْرَيْنَا بَيْنَهُمُ الْعَدَاوَةَ وَالْبَغْضَاءَ إِلَىٰ يَوْمِ الْقِيَامَةِ ۚ وَسَوْفَ يُنَبِّئُهُمُ اللَّهُ بِمَا كَانُوا يَصْنَعُونَ ﴿١٤﴾

त्यसको ठूलो भाग बिर्सिदिए जुन उनीहरूलाई शिक्षा दिइएको थियो, त हामीले पनि उनीहरूबीच शत्रुता र कटुता पारिदिऔं, जुन क़ेयामतसम्म रहनेछ ।[1] र जे-जति यिनीहरू गर्दछन् शीघ्र नै अल्लाहले उनीहरूलाई सबै भनिदिनेछ ।

يَا أَهْلَ الْكِتَابِ قَدْ جَاءَكُمْ رَسُولُنَا يُبَيِّنُ لَكُمْ كَثِيرًا مِّمَّا كُنتُمْ تُخْفُونَ مِنَ الْكِتَابِ وَيَعْفُو عَن كَثِيرٍ ۚ قَدْ جَاءَكُم مِّنَ اللَّهِ نُورٌ وَكِتَابٌ مُّبِينٌ ﴿١٥﴾

(१५) हे अहले किताब ! तिम्रो पासमा हाम्रा रसूल (मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम) आए, जो धेरैजसो ती कुराहरू भनिराखेका छन्, जुन किताब (तौरात तथा इंजील) का कुरा तिमी लुकाइराखेका थियौ[2] तथा धेरैजसो कुरालाई छाडिरहेका छन् । तिम्रो पासमा अल्लाहको तर्फबाट ज्योति तथा खुल्ला किताब (पवित्र क़ुरआन) आइसकेको छ ।[3]

यिनीसित पनि अल्लाहले वचन लियो परन्तु उनीहरूले पनि यसमा ध्यान दिएनन्, यसको परिणाम स्वरूप उनका हृदय पनि प्रभावित हुनबाट शून्य र उनका कर्म खोक्रो भईहाल्यो ।

[1]यो अल्लाहलाई दिइएको वचनको विपरीत कर्म गर्नुको प्रतिकार दण्ड हो, जुन अल्लाह तआ़लाको तर्फबाट उनीमाथि क़ेयामतसम्मको लागिरहने छ । अतः इसाईहरू कैयन् गुट छन् जो एक-अर्कासित घृणा तथा द्वेष राख्दछन्, एक-अर्कालाई अधर्मी भन्दछन् तथा एक-अर्काको पूजा स्थलमा उपासना गर्दैनन् । यस्तो लाग्छ कि मुसलमानहरूमाथि पनि यो दण्ड दिइएको छ । यो समुदाय पनि कैयौं समूहमा विभाजित छ, जसका बीच अत्याधिक मतभेद छन् एवं घृणा तथा द्वेषका पर्खाल उभिएका छन् ।

[2]अर्थात् उनीहरूले तौरात तथा इंजीलमा परिवर्तन गरे तथा फेरबदल गरे, उनलाई उजागर गरे तथा जसलाई लुकाउँथे, तिनलाई व्यक्त गरे, जस्तै पत्थरले मार्ने दण्ड । जस्तो कि हदीसमा यसको विस्तृत जानकारी पाईन्छ ।

[3]'प्रकाश तथा ज्वलन्त किताब' दुबैबाट तात्पर्य एउटै 'क़ुरआ़न करीम' हो । यिनका बीच अरबी वाव (و) अक्षरहरुको द्वन्दताको कारण छ, किन्तु दुबैबाट अभिप्रेत एक अर्थात् पवित्र क़ुरआ़न नै हो जसको स्पष्ट प्रमाण क़ुरआ़न करीमको अघिको आयत हो जसमा भनिंदैछ (يهدى به الله) "कि यसद्वारा अल्लाह तआ़ला मार्गदर्शन गर्छ । यदि प्रकाश तथा किताब दुईटा भएको भए शब्द यसप्रकार हुने थियो (يهدى بهما الله) अल्लाह तआ़ला

(१६) जसद्वारा अल्लाह उनीहरूलाई शान्तिको बाटो देखाउँछ जो त्यसको प्रसन्नताको अनुकरण गर्दछन् तथा उनीहरूलाई अन्धकारबाट आफ्नो कृपाले प्रकाशतिर निकालेर ल्याउँछ तथा उनीहरूलाई सोभ्रो मार्ग दर्शाउँछ ।

يَّهۡدِىۡ بِهِ اللّٰهُ مَنِ اتَّبَعَ رِضۡوَانَهٗ سُبُلَ السَّلٰمِ وَيُخۡرِجُهُمۡ مِّنَ الظُّلُمٰتِ اِلَى النُّوۡرِ بِاِذۡنِهٖ وَيَهۡدِيۡهِمۡ اِلٰى صِرَاطٍ مُّسۡتَقِيۡمٍ ﴿۱۶﴾

(१७) निःसन्देह उनीहरू काफ़िर (विश्वासहीन) भए जसले भने कि मरियमका पुत्र मसीह अल्लाह हो। भनिदेउ कि यदि मरियमका पुत्र मसीह र त्यसकी माता एवं विश्वका सबै मानिसहरूलाई त्यो विनाश गर्न चाहन्छ भने को छ जसको अल्लाहको अगाडी अलिकति पनि अधिकार छ ? तथा आकाशहरु तथा धर्ती र जे दुबैबीच छ अल्लाहकै राज्य हो ।

لَقَدۡ كَفَرَ الَّذِيۡنَ قَالُوۡۤا اِنَّ اللّٰهَ هُوَ الۡمَسِيۡحُ ابۡنُ مَرۡيَمَ‌ؕ قُلۡ فَمَنۡ يَّمۡلِكُ مِنَ اللّٰهِ شَيۡـًٔـا اِنۡ اَرَادَ اَنۡ يُّهۡلِكَ الۡمَسِيۡحَ ابۡنَ مَرۡيَمَ وَاُمَّهٗ وَمَنۡ فِى الۡاَرۡضِ جَمِيۡعًا‌ؕ وَلِلّٰهِ مُلۡكُ السَّمٰوٰتِ وَالۡاَرۡضِ وَمَا بَيۡنَهُمَا‌ؕ يَخۡلُقُ



यी दुबैद्वारा मार्गदर्शन गर्छ ।" परन्तु यस्तो छैन । यसकारण कुर्आन करीमका यी शब्दहरुबाट यो स्पष्ट भयो कि यी प्रकाश तथा ज्वलन्त किताबको अर्थ एउटै अर्थात कुर्आन करीम हो । यो होइन कि प्रकाशबाट नबी करीम सल्लल्लाहु अलैहि वसल्लम तथा ज्वलन्त किताबबाट पवित्र कुर्आनको अभिप्रेत हो । जस्तो कि इस्लाम धर्ममा नयाँ कुराहरू रच्नेवालाहरू मनगढन्त रूपमा रचिहालेका छन् र यो सिद्ध गर्दछन् कि नबी करीम सल्लल्लाहु अलैहि वसल्लम प्रकाश हुन् । तथा यो विश्वास रचिहालिएको छ कि "अल्लाहका प्रकाशको प्रकाश हुन् ।" यसप्रकार रचिएको मनगढन्त विश्वासको लागि यसको पक्षमा एउटा हदीस पनि वर्णन गर्दछन् कि अल्लाहले सर्वप्रथम नबी करीम सल्लल्लाहु अलैहि वसल्लमको प्रकाश पैदा गऱ्यो र पछि त्यस प्रकाशबाट सारा संसारको सृष्टि गऱ्यो । यद्यपि कि यो हदीस कुनै पनि प्रमाणित हदीसको संकलित पुस्तकमा छैन । यसको अतिरिक्त त्यस सहीह हदीसको विपरीत छ जसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, अल्लाहले सर्वप्रथम कलमको सृष्टि गऱ्यो । (اِنَّ اَوَّلَ مَا خلق الله القلم) यो कथन तिर्मिजी तथा अबू दाऊदमा छ । हदीसका प्रकाण्ड विद्वान मोहद्दिस अलबानी लेख्नु हुन्छ कि यो हदीस सही छ जुन स्पष्टरूपले गढिएको हदीस (اَوَّلُ مَا خلق الله نوري) (कि सर्वप्रथम अल्लाहले मेरो प्रकाशको रचना गऱ्यो) लाई निर्मूल सिद्ध गरिराखेको छ । (तअलीक़ातुल मिशकात भाग १, पृष्ठ ३४)

مَا يَشَآءُ ۚ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٧﴾

त्यो जे (पनि) चाहन्छ सृष्टि गर्दछ र अल्लाह सर्वशक्तिमान छ ।[1]

وَقَالَتِ الْيَهُوْدُ وَالنَّصٰرٰى نَحْنُ اَبْنٰٓؤُا اللّٰهِ وَاَحِبَّآؤُهٗ ۚ قُلْ فَلِمَ يُعَذِّبُكُمْ بِذُنُوْبِكُمْ ۚ بَلْ اَنْتُمْ بَشَرٌ مِّمَّنْ خَلَقَ ۚ يَغْفِرُ لِمَنْ يَّشَآءُ وَيُعَذِّبُ مَنْ يَّشَآءُ ۚ وَلِلّٰهِ

(१८) र यहूदी तथा ईसाई भन्दछन् कि हामी अल्लाहका पुत्र तथा मित्र हौं ।[2] तपाईं भनिदिनुस् कि त्यसो भए अल्लाह (तआला) तिम्रा पापहरुका कारण तिमीलाई दण्ड किन दिन्छ ?[3] होइन बरु तिमी त्यसको सृष्टिमा एउटा मनुष्य हौ । त्यो

यस आयतमा अल्लाह तआ़लाले आफ्नो सम्पूर्ण प्रभुत्व तथा सम्पूर्ण स्वामित्वको वर्णन गरेको छ। उद्देश्य ईसाईहरूका आदरणीय ईसालाई पूज्यको स्थान दिने कुरोको विश्वासको खण्डन गर्नु हो । आदरणीय ईसालाई साक्षात भगवान हुने कुरोलाई मान्नेवाला केही मात्र नै थिए अर्थात् एउटै समूह अथवा एउटै गुट याकूबिया गुट थियो । अब यो विश्वास लगभग सबै ईसाई गुटहरुमा आदरणीय ईसालाई भगवान मान्ने कुरो कुनै न कुनै रूपमा व्याप्त छ। यसकारण ईसाईहरूमा अब त्रिमूर्तिको विश्वासको आधारशिला छ। अत: कुरआनले यस स्थानमा स्पष्ट गरिदियो कि कुनै पैग़म्बर, रसूल तथा नबीलाई भगवानको रूप दिनु स्पष्टरूपले कुफ्र छ । यस कुफ्रलाई ईसाईहरूले गरे कि आदरणीय ईसालाई भगवानको पद दिए, यदि कुनै गुट अथवा समुदाय वा कुनै अन्य पैग़म्बरलाई मानवता तथा रिसालतको स्थानबाट उठाएर भगवानको पदमा आसीन गर्नेछ भने त्यसले पनि यसै कुफ्रलाई गर्नेछ ।

[1]यहूदीहरूले आदरणीय उज़ैरलाई तथा ईसाईहरूले आदरणीय ईसालाई अल्लाहका पुत्र भने तथा स्वयंलाई पनि अल्लाहको पुत्र तथा प्रिय ठान्नथाले । केहीको भनाई छ कि यहाँ हालत लुप्त छ अर्थात् (أتباع إبناء الله) "हामी अल्लाहका पुत्रहरू (उज़ैर तथा मसीह) का अनुयायी हौं ।" दुबै भावहरुबाट कुनै पनि भाव लिंदा त्यसबाट उनको घमण्ड तथा अल्लाह तआ़लाको विषयमा अनुचित विश्वासको प्रदर्शन हुन्छ । जसको अल्लाह तआ़ला समक्ष कुनै स्थान छैन ।

[2]यसमा उनीहरूको उपरोक्त घमण्डलाई निराधार सिद्ध गरिएको छ कि यदि तिमी वास्तवमा अल्लाहका प्रिय भएका भए अथवा प्रिय हुनुको अर्थ यो हो कि तिमी जे चाहन्छौ गर, अल्लाह तआ़लाले तिमीलाई समात्ने छैन त अल्लाह तआ़ला तिम्रा पापहरुमा दण्ड किन दिन्छ ? यसको स्पष्ट अर्थ यो हो कि अल्लाहको दरबारमा निर्णय दाबीहरुको आधारमा हुँदैन तथा न क़ेयामतको दिनमा हुनेछ, त्यो त ईमान, संयम तथा कर्महरुलाई हेर्छ एवं संसारमा पनि त्यसैको प्रकाशमा निर्णय गर्दछ तथा क़ेयामतको दिनमा पनि यसै नियमानुसार निर्णय गर्नेछ ।

مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا ز وَاِلَيْهِ الْمَصِيْرُ ﴿١٨﴾

जसलाई चाहन्छ क्षमा गर्दछ तथा जसलाई चाहन्छ यातना दिन्छ।[1] तथा अल्लाह (तआ़ला) को स्वामित्व आकाशहरु तथा धर्तीमा तथा उनीहरूका बीच जे-जति छ, प्रत्येक वस्तुमा छ। एवं उसैतिर फर्केर आउनु छ।

يٰۤاَهْلَ الْكِتٰبِ قَدْ جَآءَكُمْ رَسُوْلُنَا يُبَيِّنُ لَكُمْ عَلٰى فَتْرَةٍ مِّنَ الرُّسُلِ اَنْ تَقُوْلُوْا مَا جَآءَنَا مِنْ بَشِيْرٍ وَّلَا نَذِيْرٍ فَقَدْ جَآءَكُمْ بَشِيْرٌ وَّنَذِيْرٌ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٩﴾

(१९) हे अहले किताब ! रसूलहरूको आगमनमा एक विलम्ब पश्चात हाम्रो रसूल (मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम) आइसकेको छ, जो तिम्रो लागि (धर्म विधानहरु) को वर्णन गरिरहेछ ताकि तिमी त्यो नभन कि हाम्रो पासमा कोही शुभ-सूचक तथा सतर्क गराउने आएन, तसर्थ तिम्रो पासमा एउटा शुभ-सूचक तथा सतर्क गराउने (अन्तिम ईशदूत) आइसकेको छ,[2] निश्चय अल्लाह सर्वशक्तिमान छ।

وَاِذْ قَالَ مُوْسٰى لِقَوْمِهٖ يٰقَوْمِ اذْكُرُوْا نِعْمَةَ اللّٰهِ عَلَيْكُمْ اِذْ جَعَلَ فِيْكُمْ اَنْۢبِيَآءَ وَجَعَلَكُمْ

(२०) र स्मरण गर, जब मूसा (अलैहिस्सलाम) ले आफ्नो वर्गसित भनें कि हे मेरा वर्गका मानिसहरू ! अल्लाह (तआ़ला) को त्यस उपकारलाई स्मरण गर कि उसले तिमी मध्येबाट ईशदूत (पैग़म्बर) बनायो।

[1]यसप्रकार यो यातना तथा क्षमाको निर्णय अल्लाह तआ़लाको त्यसै नियमको आधारमा हुनेछ, जसलाई उसले स्पष्ट गरिदिएको छ कि ईमानवालाहरूलाई क्षमा तथा काफ़िरहरूलाई यातना, सबैको निर्णय यसै आधारमा हुनेछ। हे अहले किताब ! तिमी पनि उसको रचनाको उत्पत्ति अर्थात् मनुष्य हौ। तिम्रो लागि निर्णय अन्य व्यक्तिहरूभन्दा भिन्न किन होला ?

[2]आदरणीय ईसा तथा परम आदरणीय मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको मध्येको कालमा जुन लगभग ५७० वर्षको अन्तरमा छ। यो अन्तरलाई एउटा अवकाश भनिन्छ। अहले किताबसित भनिंदैछ कि यस अवकाशको पश्चात हामीले आफ्नो अन्तिम रसूल (सल्लल्लाहु अलैहि वसल्लम) लाई पठाइदिएका छौं। अब तिमी यो पनि भन्न सक्ने छैनौं कि हाम्रो पासमा कोही शुभ-सूचना दिनेवाला तथा सतर्क गर्नेवाला ईशदूत (पैग़म्बर) नै आएन।

ﻣُﻠُﻮﻛًﺎ ۖ وَّاٰﺗٰﯩﻜُﻢْ مَّا ﻟَﻢْ ﻳُﺆْتِ اَﺣَﺪًا ﻣِّﻦَ اﻟْﻌٰﻠَﻤِﻴْﻦَ ﴿٢٠﴾

तथा तिमीलाई राज्य प्रदान गऱ्यो ।[1] तथा तिमीलाई त्यो प्रदान गऱ्यो जुन सम्पूर्ण जगत्मा कसैलाई प्रदान गरेन ।[2]

[1]अधिकतर नबी इस्राईलका सन्तानहरूमा भएका छन् जसको क्रम आदरणीय ईसामा समाप्त गरिहालियो तथा अन्तिम पैग़म्बर (ईशदूत) इस्माईलको सन्तानबाट हुनुभयो–सल्लल्लाहु अलैहि वसल्लम । यसैप्रकार कैयन् बादशाह पनि इस्राईलको सन्तानमा भए र केही नबीहरूलाई पनि अल्लाह तआ़लाले राज्य प्रदान गऱ्यो, जस्तै आदरणीय सुलैमान अलैहिस्सलाम । यसको यो अर्थ निस्क्यो कि नबूअतको जस्तै राज्य पनि अल्लाह तआ़लाको पुरस्कार हो । त्यसलाई नराम्रो ठान्नु बहुत ठूलो त्रुटि हो यदि राज्य नराम्रो भएको भए अल्लाह तआ़लाले कुनै नबीलाई प्रदान गर्दैनथ्यो र न यसलाई अनुकम्पाको रूपमा पवित्र क़ुरआनमा त्यसको चर्चा गर्दथ्यो, जस्तो कि आजकल पश्चिमी लोकतन्त्रको उन्माद जनमानसमा आक्षादित छ तथा पश्चिमका चालबाजहरूले यो मन्त्र यसप्रकार फुकिराखेका छन् कि केवल पश्चिमी राजनीतिबाट प्रभावित राजनीतिज्ञ मात्र होइन, बरु पगडी र टोपीवाला पनि यसबाट बच्न नसकून् । अन्ततः राज्य तथा वशगत राज्य यदि शासक र राजा न्यायकारी एवं संयमी छ भने लोकतन्त्रभन्दा हजार गुना उत्तम छ ।

[2]यो संकेत पुरस्कार र चमत्कारीहरूतिर छ, जुन अल्लाहले इस्राईलका पुत्रहरूलाई प्रदान गऱ्यो । जस्तै मन्न तथा सलवाको अवतरण बादलहरुको छायाँ, फ़िरऔनबाट मुक्तिको लागि नदीबाट मार्ग बनाउनु आदि । यसप्रकार यस समुदायलाई आफ्नो समयमा श्रेष्ठ तथा उच्च स्थान प्राप्त थियो । परन्तु अन्तिम ईशदूत (पैग़म्बर) परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालत तथा उनको आगमनको पश्चात यो श्रेष्ठ स्थान मुसलमानहरूलाई प्राप्त भयो ।

﴿كُنتُمْ خَيْرَ أُمَّةٍ أُخْرِجَتْ لِلنَّاسِ﴾

"तिमी श्रेष्ठ समुदाय हौ जसलाई मानव जातिको लागि बनाइएको छ ।" (सूरः आले-इमरान-११०)

परन्तु यो पनि प्रतिबन्धित छ, त्यस उद्देश्यको पूर्तिका साथ जसको वर्णन यसै मन्त्रमा गरिएको छ ।

﴿تَأْمُرُونَ بِالْمَعْرُوفِ وَتَنْهَوْنَ عَنِ الْمُنكَرِ وَتُؤْمِنُونَ بِاللَّهِ﴾

"तिमी मानिसहरूलाई सत्कर्मको आदेश दिन्छौ तथा कुकर्मबाट रोक्ने गर्छौ । एवं अल्लाह तआ़लामा विश्वास राख्दछौ ।"

يَٰقَوْمِ ٱدْخُلُوا ٱلْأَرْضَ ٱلْمُقَدَّسَةَ ٱلَّتِى كَتَبَ ٱللَّهُ لَكُمْ وَلَا تَرْتَدُّوا عَلَىٰٓ أَدْبَارِكُمْ فَتَنقَلِبُوا خَٰسِرِينَ ﴿٢١﴾

(२१) मेरा वर्गका मानिसहरू ! त्यस पवित्र धर्तीमा प्रवेश गर ।[1] जुन अल्लाह तआलाले तिम्रो नाममा लेखिदिएको छ ।[2] र आफ्नो पिठ्यूँ नदेखाउ ।[3] कि हानिमा पर्नेछौ ।

قَالُوا يَٰمُوسَىٰٓ إِنَّ فِيهَا قَوْمًا جَبَّارِينَ وَإِنَّا لَن نَّدْخُلَهَا حَتَّىٰ يَخْرُجُوا مِنْهَا فَإِن يَخْرُجُوا مِنْهَا فَإِنَّا دَٰخِلُونَ ﴿٢٢﴾

(२२) उनीहरूले उत्तर दिए हे मूसा ! त्यहाँ त शक्तिशाली लडाकू मानिसहरू छन् तथा जबसम्म उनीहरू त्यहाँबाट निस्किदैनन्, हामी त कदापि जाने छैनौं । यदि उनीहरू त्यहाँबाट निस्किन्छन् भने हामी (प्रसन्नतापूर्वक) त्यहाँ जानेछौं ।[4]

قَالَ رَجُلَانِ مِنَ ٱلَّذِينَ يَخَافُونَ أَنْعَمَ ٱللَّهُ عَلَيْهِمَا ٱدْخُلُوا عَلَيْهِمُ ٱلْبَابَ

(२३) परन्तु जो अल्लाहसित तर्सिराखेका थिए, उनीहरू मध्येबाट दुई पुरुषले भने जसमाथि अल्लाहले कृपा

[1]इस्राईलका सन्तानका परम पूर्वज आदरणीय याकूब अलैहिस्सलामको निवास स्थान बैतुल मक़दिस थियो । परन्तु आदरणीय यूसुफ़ अलैहिस्सलामको मिश्रमा राज्यको समय यिनीहरू मिश्रमा गई बसोबास गर्नथाले । अनि त्यतिखेर देखि त्यसबेलासम्म यिनीहरू त्यहीं रहे, जबसम्म आदरणीय मूसा अलैहिस्सलाम राता-रात उनीहरूलाई फ़िरऔनको अत्याचारबाट बचाएर (फ़िरऔनबाट लुकेर) मिश्रबाट निकाल्नु भएन । त्यस समय बैतुल मक़दिसमाथि अमालकाको राज थियो, जो एक वीर जाति थिए । जब आदरणीय मूसा अलैहिस्सलामले फेरि बैतुल मक़दीस गई आबाद हुने कुरोको निश्चय गरे, त यसको लागि त्यहाँ राज गर्नेवालाहरू अर्थात् अमालका जातिका मानिसहरूसित युद्ध अवश्य गर्नु थियो, अत: आदरणीय मूसाले आफ्नो समुदायका मानिसहरूलाई पवित्र भूमिमा प्रवेश गर्न आदेश दिनुभयो र अल्लाहको तर्फबाट विजयको शुभ-सूचना पनि सुनाउनु भयो । परन्तु यसको उपरान्त पनि इस्राईलका सन्तान अमालिकासँग युद्ध गर्न तयार भएन । (इब्ने कसीर)

[2]यसबाट तात्पर्य विजय हो, जसको वचन अल्लाह तआलाले धर्म-युद्धको रूपमा उनीसित गरेको थियो ।

[3]अर्थात् धर्मयुद्धबाट मुख नफर्काउ ।

[4]इस्राईलको सन्तान अमालकाको वीरताबाट भयभीत भई प्रथम चरणमा साहस गुमाइहाल्यो तथा धर्म-युद्धबाट रोकियो, अल्लाहका रसूल आदरणीय मूसाको आदेशको कुनै चिन्ता गरेनन् न अल्लाह तआलाको विजय प्रदान गर्नेमा विश्वास गऱ्यो । तथा त्यहाँ जानुबाट स्पष्टरूपले इन्कार गरिदियो ।

وَإِذَا دَخَلْتُمُوهُ فَإِنَّكُمْ غَٰلِبُونَ ۚ وَعَلَى ٱللَّهِ فَتَوَكَّلُوٓا۟ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٢٣﴾

गऱ्यो कि तिमी उनको मुकाबिला द्वारबाट प्रवेश गर, जब तिमी प्रवेश गरिहाल्नेछौ त तिमी प्रभावी रहनेछौ तथा यदि ईमान राख्दछौ भने अल्लाहमाथि नै भरोसा गर ।[1]

قَالُوا۟ يَٰمُوسَىٰٓ إِنَّا لَن نَّدْخُلَهَآ أَبَدًا مَّا دَامُوا۟ فِيهَا ۖ فَٱذْهَبْ أَنتَ وَرَبُّكَ فَقَٰتِلَآ إِنَّا هَٰهُنَا قَٰعِدُونَ ﴿٢٤﴾

(२४) उनीहरूले भने कि हे मूसा ! हामी त्यहाँ कदापि जाने छैनौं जबसम्म उनी त्यसमा रहनेछन्, अतः तिमी र तिम्रा पोषक गई दुबै लड, हामी यही बसेका छौं ।[2]

قَالَ رَبِّ إِنِّى لَآ أَمْلِكُ إِلَّا نَفْسِى وَأَخِى ۖ فَٱفْرُقْ بَيْنَنَا وَبَيْنَ ٱلْقَوْمِ ٱلْفَٰسِقِينَ ﴿٢٥﴾

(२५) त्यस (मूसा) ले भन्यो मेरो पोषक ! म मात्र स्वयं माथि तथा आफ्नो भाई (हारून) माथि अधिकार राख्दछु । अतः हाम्रो तथा अवज्ञाकारीहरूबीच अलगाव गरिदेउ ।[3]

قَالَ فَإِنَّهَا مُحَرَّمَةٌ عَلَيْهِمْ ۛ أَرْبَعِينَ سَنَةً ۛ يَتِيهُونَ فِى

(२६) त्यस (अल्लाह) ले भन्यो यो (भूमि) चालीस वर्षसम्म उनीमाथि निषेधित छ, उनी धर्तीमा भ्रमण

[1]मूसाको जातिमा मात्र यिनै दुई व्यक्ति थिए, जसलाई अल्लाहको तर्फबाट सहायतामा विश्वास थियो, उनीहरूले जातिलाई सम्झाए कि तिमी साहस त गर, अनि हेर कि अल्लाह तआ़ला कुन प्रकारले विजय प्रदान गर्दछ ।

[2]परन्तु यसका उपरान्त पनि इस्राईलको सन्तानले कायरता, दुराचार तथा दुष्टताको प्रदर्शन गर्दै भने कि तिमी र तिम्रा पोषक गएर लड्नू । यसको विपरीत बद्रको युद्धको समय रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले सहाबा (رضی الله عنهم) सित विचार-विमर्श गर्नुभयो त उनीहरूले आफ्नो अल्पसंख्या तथा कम साधनको उपरान्त पनि आफ्नो उत्साहको प्रदर्शन गरे र यो पनि भने, "हे रसूल अल्लाह सल्लल्लाहु अलैहि वसल्लम! हामी तपाईंसित त्यस्तो भन्ने छैनौं जस्तो मूसाको समुदायले मूसालाई उत्तर दिए ।" (सहीह बुख़ारी, किताबुल मग़ाजी वल तफ़सीर)

[3]यसमा अवज्ञाकारी समुदायको समक्ष आफ्नो विवशताको प्रदर्शन पनि छ तथा उनीहरूबाट अलग हुने कुराको घोषणा पनि ।

الْأَرْضِ ۚ فَلَا تَأْسَ عَلَى الْقَوْمِ الْفٰسِقِيْنَ ﴿٢٦﴾

गरिराख्ने छन् ।[१] अतः तपाईं (मूसा) अवज्ञाकारीहरूप्रति खेद नगर्नुस् ।[२]

وَاتْلُ عَلَيْهِمْ نَبَاَ ابْنَيْ اٰدَمَ بِالْحَقِّ ۘ اِذْ قَرَّبَا قُرْبَانًا فَتُقُبِّلَ مِنْ اَحَدِهِمَا وَلَمْ يُتَقَبَّلْ مِنَ الْاٰخَرِ ؕ

(२७) र आदमका दुई पुत्रहरुको सत्यकथा उनीहरूलाई पढेर सुनाइदेउ[३] जबकि दुबैले एक-एक उपहार भेट गरे त एकबाट स्वीकार गरियो तथा दोस्रोबाट अस्वीकार गरियो,[४] तब

[१]यसलाई तीहको मैदान भनिन्छ, जसमा चालीस वर्षसम्म यिनीहरू आफ्नो अवज्ञा तथा धर्मयुद्धबाट इन्कारको कारण हिंडिरहे, तैपनि यस मैदानमा अल्लाहले उनलाई खानको लागि मन्न (एक प्रकारको गुलियो गुँद) तथा सल्वा (एक प्रकारको पंक्षी) उतार्‍यो, जसबाट वाक्क भई उनीहरूले आफ्ना ईशदूतसित भनें कि नित्य एक प्रकारको खानाले हाम्रो मन भरिसकेको छ । अतः आफ्नो पोषक (अल्लाह) सित प्रार्थना गर कि त्यसले अनेक प्रकारका वनस्पति तथा दाल हाम्रो लागि उब्जाओस् । यही उनीमाथि मेघहरुले छाया गरे, पत्थरमा आदरणीय मूसाले प्रहार गर्नाले बाह्र जातिहरुका लागि बाह्र स्रोत प्रभावित भए, यस्तै अनुकम्पाहरु पनि हुँदै गरे । चालीस वर्षपछि फेरि यस्तो स्थिति उत्पन्न गरियो कि यिनीहरू बैतुल मक्दिसमा प्रवेश गरे ।

[२]ईशदूत (पैग़म्बर) जब धर्म प्रचार-प्रसारको उपरान्त पनि देख्दछ कि उसको समुदाय सोझो मार्ग अपनाउन तयार छैन, जसमा त्यसलाई दुवै लोकका भलाईहरु छन्, तव स्वभाविक रूपले त्यसलाई अत्याधिक दुःख तथा चिन्ता हुन्छ । यस्तै नबी सल्लल्लाहु अलैहि वसल्लमको पनि दशा हुन्थ्यो, जसको वर्णन कुरआन मजीदमा विभिन्न स्थानहरुमा छ । परन्तु यस आयतमा आदरणीय मूसालाई सम्बोधित गरिदैंछ कि जब तिमीले आफ्नो सतर्क गर्ने तथा आमन्त्रण दिने कर्तव्य पूर्ण गरिहाल्यौ तथा अल्लाहको सन्देश मानिसहरूसम्म पुर्‍याइदियो र आफ्नो समुदायलाई एक विशाल सफलताको प्रारम्भिक बिन्दुमा ल्याएर उभ्याइदियो, परन्तु उनीहरू आफ्नो दुस्साहस तथा दुर्बोधको कारण तिम्रो कुरा मान्न तैयार छैनन्, त तिमी आफ्नो कर्तब्य पूरा गरिसक्यौ तथा अब तिमीलाई उनको विषयमा दुखी एवं चिन्तित हुनुको कुनै आवश्यकता छैन । यस्ता अवसरमा दुखी हुनु एउटा स्वभाविक कुरो हो । परन्तु यस सान्त्वनाको यो तात्पर्य हो कि आमन्त्रण दिइसके तथा सतर्क गरिसके उपरान्त अब तिमी अल्लाहको निकट भारमुक्त भइहाल्यौ ।

[३]आदमका यी दुई पुत्रहरुका नाम हाबील तथा क़ाबील थियो ।

[४]यो चढावा अथवा बलि केलाई प्रस्तुत गरियो ? यसको विषयमा कुनै उचित कथन प्राप्त छैन । परन्तु यो अवश्य प्रसिद्ध छ कि प्रारम्भमा आदरणीय आदम तथा होवाको मिलापले एक समयमा एक पुत्र तथा एक पुत्रीको जन्म हुन्थ्यो, दोस्रो गर्भबाट पुनः यसैप्रकार एक पुत्र तथा एक पुत्री जन्म लिन्थे । एक गर्भको बहिनी-भाईको विवाह दोस्रा

قَالَ لَاَقْتُلَنَّكَ ۗ قَالَ اِنَّمَا يَتَقَبَّلُ اللّٰهُ مِنَ الْمُتَّقِيْنَ ﴿٢٧﴾

उसले भन्यो कि म तिमीलाई अवश्य मारिदिने छु त उसले भन्यो कि अल्लाह संयमीहरुबाट नै स्वीकार गर्दछ ।

لَئِنْۢ بَسَطْتَّ اِلَيَّ يَدَكَ لِتَقْتُلَنِيْ مَاۤ اَنَا بِبَاسِطٍ يَّدِيَ اِلَيْكَ لِاَقْتُلَكَ ۚ اِنِّيْۤ اَخَافُ اللّٰهَ رَبَّ الْعٰلَمِيْنَ ﴿٢٨﴾

(२८) यदि तिमी मलाई हत गर्नको लागि हात बढाउँछौ भने म तिम्रो हत्या गर्नको लागि हात बढाउन सक्दिन । म अल्लाह सम्पूर्ण जगत्‌को पालनकर्तासित तर्सन्छु ।

اِنِّيْۤ اُرِيْدُ اَنْ تَبُوْٓاَ بِاِثْمِيْ وَاِثْمِكَ فَتَكُوْنَ مِنْ اَصْحٰبِ النَّارِ ۚ وَذٰلِكَ جَزٰٓؤُا الظّٰلِمِيْنَ ﴿٢٩﴾

(२९) म चाहन्छु कि तिमी मेरो पाप तथा आफ्नो पाप समेट[1] र नर्कवासीहरूमध्ये होउ, तथा यही अत्याचारीहरूको फल हो ।

فَطَوَّعَتْ لَهٗ نَفْسُهٗ قَتْلَ اَخِيْهِ فَقَتَلَهٗ فَاَصْبَحَ مِنَ الْخٰسِرِيْنَ ﴿٣٠﴾

(३०) अनि उसका इच्छाहरुले उसलाई भाइको हत्या गर्न तयार गरिदियो र

गर्भका भाई बहिनीसँग हुन्थ्यो । हाबीलसँग जन्मने बहिनी कुरूप थिइन् तथा क़ाबीलसँग जन्मने बहिनी सुन्दर थिइन् । त्यस समयको नियमानुसार हाबीलको विवाह काबीलकी बहिनीसित तथा क़ाबीलको विवाह हाबीलकी बहिनीसित हुनु थियो, परन्तु काबील चाहन्थ्यो कि त्यो आफ्नो विवाह हाबीलकी बहिनीको सट्टा आफ्नै बहिनीसित गरोस्, जो सुन्दर थिइन् । आदरणीय आदमले त्यसलाई सम्भाउनु भयो तर त्यसले मानेन, अन्तमा आदरणीय आदमले अल्लाहको लागि बलि चढाउन आदेश दिनुभयो र भन्नुभयो कि जसको बलि स्वीकार हुनेछ, क़ाबीलकी बहिनीको विवाह उसैसँग गरिदिइने छ । हाबीलको बलि स्वीकार भयो आकाशबाट अग्नि आयो र त्यसलाई खायो जुन उसको स्वीकार हुने कुराको प्रमाण थियो । केही व्याख्याकारहरूको कथन छ कि त्यसतै नै दुबै भाईहरूले आ-आफ्नो तर्फबाट अल्लाह तआ़लाको लागि बलि चढाएका थिए, हाबीलले एउटा राम्रो गाई को बलि चढाए तथा क़ाबीलले एउटा सिट्टे गऱ्यो । हाबीलको बलि स्वीकार भएको कारण क़ाबील ईर्ष्याको शिकार भईहाल्यो ।

[1]मेरो पापको अर्थ, हत्याको त्यो पाप हो जुन मलाई त्यसबेला हुन्थ्यो, जबकि म तिम्रो हत्या गर्थे । जस्तो कि हदीसमा वर्णित छ कि हत एवं हत्यारा दुबै नरकमा जानेछन् । सहावाले सोधे कि हत्याराको नरकमा जाने कुरो समभमा आउँछ, परन्तु जसको हत्या गरिएको छ, त्यो नरकमा किन जानेछ ? उहाँ सल्लल्लाहु अलैहि वसल्लमले उत्तर दिनुभयो कि यसकारण कि त्यो पनि हत्याराको हत्या गरिदिन चाहन्थ्यो । (सहीह बुख़ारी तथा मुस्लिम, किताबुल फितन)

उसले त्यसको हत्या गरिदियो, जसबाट त्यो हानि प्राप्त गर्नेहरूमा पर्न गयो ।[1]

فَبَعَثَ اللّٰهُ غُرَابًا يَّبْحَثُ فِي الْاَرْضِ لِيُرِيَهٗ كَيْفَ يُوَارِيْ سَوْءَةَ اَخِيْهِ ۭ قَالَ يٰوَيْلَتٰٓى اَعَجَزْتُ اَنْ اَكُوْنَ مِثْلَ هٰذَا الْغُرَابِ فَاُوَارِيَ سَوْءَةَ اَخِيْ ۚ فَاَصْبَحَ مِنَ النّٰدِمِيْنَ ۚ

(३१) अनि अल्लाह (तआ़ला) ले एउटा कागलाई पठायो जो धर्ती खनिराखेको थियो ताकि त्यसलाई देखाओस् कि त्यसले आफ्नो भाईको लाश (शव) लाई कस्तो प्रकारले लुकाओस् । त्यो भन्नथाल्यो हाय अफसोच ! के म यस्तो गर्न योग्य पनि रहिन कि आफ्नो भाईको लाशलाई यस कागको जस्तो गाड्न सकूँ ? अनि त त्यो बडो दुखी एवं लज्जित भयो ।

مِنْ اَجْلِ ذٰلِكَ ۚ كَتَبْنَا عَلٰي بَنِيْٓ اِسْرَاۗءِيْلَ اَنَّهٗ مَنْ قَتَلَ نَفْسًۢا

(३२) यसैकारण हामीले इस्राईलका सन्तानबारे लेखिदियौं कि जसले कुनै व्यक्तिलाई

---

[1]यसकारण हदीसमा वर्णन छ ।

« لا تُقْتَلُ نَفْسٌ ظُلْمًا إلاّ كانَ عَلَى ابنِ آدَمَ الأَوّلِ كِفْلٌ مِنْ دَمِها؛ لأَنّهُ كانَ أَوّلَ مَنْ سَنَّ القَتْلَ »

"जुन पनि हत्या अत्याचार स्वरूप हुन्छ (हत्यासँग) त्यसको अनर्थ रगतको बोझ आदमको त्यस पहिलो पुत्रमाथि पनि हुन्छ किनभने यो प्रथम व्यक्ति हो जसले हत्याको कार्य गऱ्यो ।" (सहीह बुख़ारी किताबुल अम्बिया तथा मुस्लिम किताबुल किसाम:)

इमाम इब्ने क़सीर भन्दछन् कि "हेर्दाखेरि यो प्रतीत हुन्छ कि क़ाबीललाई हाबीलको अनर्थ हत्या गर्नको दण्ड संसारमा प्राथमिक रूपले दिइहालिएको थियो । हदीसमा वर्णित छ नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो ।

« مَا مِنْ ذَنْبٍ أَجْدَرُ أَنْ يُعَجِّلَ اللهُ عُقُوبَتَهُ في الدُّنْيا مَعَ مَا يَدَّخِرُ لِصَاحِبِهِ فِي الآخِرَةِ؛ مِنَ البَغْيِ وقطيعَةِ الرَّحِمِ »

"अत्याचार एवं क्रुरता तथा सम्बन्ध भङ्ग गर्नु दुई यस योग्य पाप छन् कि अल्लाह तुरुन्त यसको दण्ड संसारमा दिइहालोस्, तैपनि परलोकको दण्ड यसका अतिरिक्त त्यसको लागि सञ्चित हुनेछ, जुन त्यहाँ भोग्नु पर्नेछ ।" (अबू दाऊद किताबुल अदब, इब्ने माजा किताबुल जुहद तथा मुसनद अहमद ५/३६-३८)

र क़ाबीलमा यी दुबै पाप एकत्रित भइहालेका थिए । (इब्ने कसीर)

بِغَيْرِ نَفْسٍ اَوْ فَسَادٍ فِى الْاَرْضِ فَكَاَنَّمَا قَتَلَ النَّاسَ جَمِيْعًا ۭ وَمَنْ اَحْيَاهَا فَكَاَنَّمَآ اَحْيَا النَّاسَ جَمِيْعًا ۭ وَلَقَدْ جَاۗءَتْهُمْ رُسُلُنَا بِالْبَيِّنٰتِ ۡ ثُمَّ اِنَّ كَثِيْرًا مِّنْهُمْ بَعْدَ ذٰلِكَ فِى الْاَرْضِ لَمُسْرِفُوْنَ ۝

कसैको हत्याको बदला लिन वा धर्तीमा फसाद फैलाउनुको अतिरिक्त कुनै अरु कारणले मारिदियो भने मानौं उसले सम्पूर्ण मानिसहरूको हत्या गरिदियो र जसले त्यसलाई जीवन प्रदान गऱ्यो, त्यसले मानौं सम्पूर्ण मानिसहरूलाई जीवन दान गऱ्यो।[1] उनको पासमा हाम्रा रसूल स्पष्ट प्रमाण लिएर आए, तैपनि उनीहरूमध्ये अधिकतर मानिसहरू धर्तीमा अत्याचार गर्नेहरू नै रहे।[2]

اِنَّمَا جَزٰۗؤُا الَّذِيْنَ يُحَارِبُوْنَ اللّٰهَ وَرَسُوْلَهٗ وَيَسْعَوْنَ فِى الْاَرْضِ فَسَادًا اَنْ يُّقَتَّلُوْٓا اَوْ يُصَلَّبُوْٓا اَوْ تُقَطَّعَ اَيْدِيْهِمْ وَاَرْجُلُهُمْ مِّنْ خِلَافٍ اَوْ يُنْفَوْا مِنَ الْاَرْضِ ۭ ذٰلِكَ

(३३) उनीहरूको दण्ड जो अल्लाह (तआ़ला) सित र त्यसका रसूलसित लड्दछन् तथा धर्तीमा उपद्रव गर्दछन्, यही नै छ कि उनीहरूको हत्या गरियोस् अथवा झुन्ड्याइयोस अथवा विपरीत दिशाहरुमा उनका हात-खुट्टा काटिदिइयोस् अथवा उनीहरूलाई

[1]यस अवैध हत्याको पश्चात अल्लाह तआ़लाले मानवगणको मूल्यलाई व्यक्त गर्नको लागि इस्राईलको सन्तानलाई यो आदेश अवतरित गऱ्यो । यसबाट अनुमान लगाउन सकिन्छ कि अल्लाह तआ़लाकहाँ मानवगणको कति महत्व छ तथा कति आदर छ तथा यो नियम केवल इस्राईलको सन्तानको लागि थिएन इस्लाम धर्मका शिक्षाहरुको अनुसार पनि यो नियम चिरस्थाई छ। सुलैमान बिन अली रिबई भन्दछन् कि मैले आदरणीय हसन बसरीसित सोधे, "यो नियम हाम्रो लागि पनि हो, जुनप्रकार इस्राईलको सन्तानको लागि थियो।" उनले उत्तर दिए "हो, सौगन्ध छ त्यस शक्तिको जसको अतिरिक्त कोही पूजा योग्य छैन । इस्राईलको सन्तानको रगत हाम्रा रगतभन्दा अधिक आदरणीय थिएनन् ।"

[2]यसमा यहूदीहरूको निन्दा गरिएको छ कि उनको पासमा सबै नबी स्पष्ट लक्षण तथा शुभ-सूचना लिएर आए, परन्तु उनको आचरण सधैं अवज्ञाकारिता तथा सीमा उल्लघंन गर्नेवाला नै रहयो। यसमा यस्तो प्रतीत हुन्छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिइराखिएको छ कि यिनी उहाँको हत्या गर्न तथा हानि पुऱ्याउने जुन षड्यन्त्र गर्दैरहेका छन्, यो उनको कुनै नयाँ कुरा होइन । यिनको सम्पूर्ण इतिहास यिनको छल तथा कपटले परिपूर्ण छ । तपाईं हर स्थितिमा अल्लाहमा भरोसा गर्नुस, त्यो उनीहरूभन्दा राम्रो उपाय जान्दछ, त्यो सबै षड्यन्त्रहरूबाट बचाउनमा निपुण छ ।

لَهُمْ خِزْيٌ فِي الدُّنْيَا وَلَهُمْ فِي الْآخِرَةِ عَذَابٌ عَظِيمٌ ﴿٣٣﴾

देशबाट निष्कासित गरियोस् ।[1] यो त भयो उनको सांसारिक अपमान तथा अनादर तथा आख़िरतमा उनको लागि ठूलो यातना छ ।

إِلَّا الَّذِينَ تَابُوا مِن قَبْلِ أَن تَقْدِرُوا عَلَيْهِمْ ۖ فَاعْلَمُوا أَنَّ اللَّهَ

(३४) परन्तु जो आफूमाथि तिम्रो नियन्त्रणभन्दा पूर्व क्षमा माँगदछन् ।[2] निःसन्देह अल्लाह तआला

[1]यसको अवतरणको विशेषताको विषयमा वर्णन गरिन्छ कि उकल तथा ओरैना जातिका केही मानिसहरू मुसलमान भई मदीना आए, उनीहरूलाई मदीनाको जलवायु उनको स्वास्थ्यमा नराम्रो प्रभाव पाऱ्यो तब नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले उनीहरूलाई मदीना बाहिर, जहाँ दानका उँट थिए, पठाइदिनुभयो कि उनको दूध-मूत्र, पियो, अल्लाह स्वस्थ गर्नेछ । अतः केही दिनपछि उनीहरू स्वस्थ भइहाले, परन्तु त्यसको पश्चात उनीहरूले ऊँटका रखवाला गोठालाहरुको हत्या गरिदिए तथा ऊँट धपाएर लगे । जब नबी सल्लल्लाहु अलैहि वसल्लमलाई यस विषयमा सूचना प्राप्त भयो तब उहाँ सल्लल्लाहु अलैहि वसल्लमले उनका पछि मानिसहरू दगुराउनु भयो जो उनीहरूलाई ऊँटहरुसहित समातेर ल्याए । नबी सल्लल्लाहु अलैहि वसल्लमले उनका हात-खुट्टा उल्टो दिशाबाट काटिहाले, उनका आँखामा तातो सूईरो हाल्न लगाउनु भयो (किनभने उनीहरूले पनि गोठालाहरुसँग यस्तै गरेका थिए) अनि उनीहरूलाई घाममा राखिदिए, यहाँसम्मकि उनीहरू त्यहीं मरिहाले । सहीह बुख़ारीमा यो शब्द पनि आउँछ कि उनीहरूले चोरी पनि गरे तथा हत्या पनि गरे, ईमान ल्याए पश्चात कुफ्र पनि गरे, तथा अल्लाह तथा रसूलतिर युद्ध पनि । (सहीह बुख़ारी किताबुद्दियात वल तिब्ब वल तफ़सीर र सहीह मुस्लिम किताबुल क़सामः) । यसलाई आयत मुहारबा भनिन्छ । यो सामान्य आदेश हो अर्थात मुसलमान तथा काफ़िर दुबैका लागि हो । मुहारबाको अर्थ हो कि कुनै संगठित तथा शस्त्रहरुले सुसज्जित जत्थाको इस्लामी राज्यभित्र अथवा त्यसको निकट जङ्गल आदिमा बाटो हिंडिरोखेका क़ाफिला अथवा व्यक्ति अथवा समूहमाथि हमला गर्नु, हत्या तथा उपद्रव गर्नु, लुकिछिपि अपहरण गर्नु । यसका जो चार दण्ड वर्णित गरिएका छन्, इमाम (समयका शासक) लाई अधिकार छ कि ती मध्येबाट जुन दण्ड उचित ठान्दछन्, दिऊन् । केही भन्दछन् कि यदि मोहारिबहरूले हत्या, चोरी तथा आतङ्क फैलाएका छन् भने उनलाई मृत्युदण्ड, (हत्या अथवा फाँसी) दिइने छ तथा जसले केवल हत्या गऱ्यो तथा माल लिएर त्यसको पनि हत्या गरिनेछ, तथा जसले हत्या गऱ्यो र माल पनि खोस्यो त्यसको एक दाहिने हात तथा वायाँ खुट्टा अथवा बायाँ हात तथा दाहिने खुट्टा काटिनेछ । तथा जसले न हत्या गऱ्यो एवं न माल खोस्यो त्यसले केवल आतङ्क फैलाइ त्यसलाई देशबाट निष्काशित गरिनेछ । इमाम शौकानीको कथन छ कि पहिलो कुरो उचित छ कि दण्ड दिनुमा इमामको अधिकार छ । (फ़तहुल क़दीर)

[2]यदि गिरफ्तार हुनुभन्दा पूर्व त्यसले क्षमा माँगेर इस्लामी राज्यको शरणमा आउने घोषणा गरिदिन्छ भने त्यसलाई क्षमा गरिदिइने छ, वर्णित दण्ड दिइने छैनन् ।

غَفُورٌ رَّحِيمٌ ﴿٣٤﴾

अत्याधिक क्षमाशील तथा अत्याधिक कृपालु एवं दयालु छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اتَّقُوا اللَّهَ وَابْتَغُوا إِلَيْهِ الْوَسِيلَةَ وَجَاهِدُوا فِي سَبِيلِهِ لَعَلَّكُمْ تُفْلِحُونَ ﴿٣٥﴾

(३५) हे मुसलमानहरू ! अल्लाह तआ़लासित तर्सिराख तथा त्यसतिर निकटता प्राप्त गर्ने प्रयत्न गर ।[1] तथा त्यसको मार्गमा धर्मयुद्ध गर ताकि तिम्रो (हित) भलाई होस् ।

तर फेरि यस विषयमा मतभेद छ कि दण्डको क्षमाको साथ उनले हत्या गरेर अथवा माल लुटेर अथवा बलात्कार गरेर मनुष्यहरुलाई जुन कष्ट दिएका छन्, यो अपराध पनि क्षमा गरिनेछ अथवा तिनको बदला लिइनेछ । केही आलिमहरूका निकट यिनी क्षमा गरिने छैनन्, बरु यिनको बदला लिइने छ । इमाम शौक़ानी तथा इमाम इब्ने क़सीरको झुकाव यसतिर छ कि उनलाई क्षमा गरियोस् र यसको प्रत्यक्ष आयतको उद्देश्य बताएका छन् । तर गिरफ्तारीको पश्चात क्षमा माग्नाले अपराध क्षमा हुनेछैन, उनी दण्डका अधिकारी हुनेछन् । (फ़तहुल क़दीर तथा इब्ने कसीर)

[1]वसीला (وسيلة) को अर्थ यस्तो विषय हो जुन कुनै उद्देश्यको प्राप्ति तथा त्यसको सामीप्यको साधन बनोस । "अल्लाह तआ़लाको निकटता प्राप्त गर्नुको कारण प्रयत्न गर" को अर्थ हुनेछ कि यस्ता कर्म गर जसबाट तिमीलाई अल्लाहको प्रसन्नता तथा त्यसको निकटता प्राप्त होस् । इमाम शौकानीको कथन छ, "वसीला अर्थात् सामीप्य संयम आदि ती सत्कर्म हुन्, जसका माध्यमबाट भक्त अल्लाहको निकटता प्राप्त गर्दछन् ।" यसैप्रकार प्रतिबन्धित तथा निषेध वस्तु तथा कर्महरुबाट बच्नाले पनि अल्लाहको निकटता प्राप्त हुन्छ, यसकारण प्रतिबन्धित तथा निषेध वस्तु तथा कर्महरुलाई छाड्नु पनि अल्लाहको निकटता प्राप्त गर्नुको माध्यम हो । परन्तु मूर्खहरूले यस वास्तविक माध्यमलाई छाडी चिहानमा गाडिएका मानिसहरूलाई आफ्नो माध्यम बनाइहालेका छन्, जसको धार्मिक नियमहरूमा कुनै स्थान छैन । अपितु हदीसमा त्यस मोक़ामे महमूद (उच्च स्थान) लाई पनि वसीला भनिएको छ जो स्वर्गमा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई प्रदान गरिनेछ । यसैले उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि जो पनि अजान पश्चात मेरो लागि यस माध्यमको प्रार्थना गर्नेछ, त्यो मेरो शिफ़ाअतको पात्र हुनेछ । (सहीह बुख़ारी किताबुल अजान र सहीह मुस्लिम किताबुल सलात) दुआ वसीला:

« اللَّهُمَّ! رَبَّ هٰذِهِ الدَّعْوَةِ التَّامَّةِ، وَالصَّلٰوةِ الْقَائِمَةِ، آتِ مُحَمَّدًا الْوَسِيلَةَ وَالْفَضِيلَةَ وَابْعَثْهُ مَقَامًا مَحْمُودًا الَّذِي وَعَدْتَهُ »

(३६) विश्वास गर कि काफ़िरहरूसित यदि त्यो सबै कुरो छ, जुन सम्पूर्ण धर्तीमा छ तथा त्यसको समान अरु अधिक पनि छ र उनी ती सबैलाई क़ेयामतको दिनको यातनाको साटो प्रतिशोधमा दिन चाहन्छन् तैपनि असम्भव छ कि उनीहरूको तर्फबाट दिइने यी सबै कुरा स्वीकार गरियोस्, उनको लागि त दुखदायी यातना छ ।[1]

إِنَّ الَّذِينَ كَفَرُوا لَوْ أَنَّ لَهُم مَّا فِي الْأَرْضِ جَمِيعًا وَمِثْلَهُ مَعَهُ لِيَفْتَدُوا بِهِ مِنْ عَذَابِ يَوْمِ الْقِيَامَةِ مَا تُقُبِّلَ مِنْهُمْ ۖ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٣٦﴾

(३७) उनीहरू इच्छा गर्नेछन् कि नरकबाट उम्कन पाउन् परन्तु उनीहरू कदापि त्यसबाट निस्कन सक्ने छैनन्, उनका लागि त स्थायी यातनाहरू छन् ।[2]

يُرِيدُونَ أَن يَخْرُجُوا مِنَ النَّارِ وَمَا هُم بِخَارِجِينَ مِنْهَا ۖ وَلَهُمْ عَذَابٌ مُّقِيمٌ ﴿٣٧﴾

(३८) चोर तथा चोरनीका हात काटिदेउ,[3] यो उनीहरूको कर्तुतको (कुकर्मको) बदला तथा अल्लाहको

وَالسَّارِقُ وَالسَّارِقَةُ فَاقْطَعُوا أَيْدِيَهُمَا جَزَاءً بِمَا كَسَبَا نَكَالًا

[1]हदीसमा वर्णन छ कि एक नरकवासीलाई नरकबाट निकाले र अल्लाह तआलाको समक्ष ल्याइनेछ । अल्लाह तआला त्यससित सोध्ने छ कि "तिमीले आफ्नो विश्राम स्थल कस्तो पायौ ? त्यसले भन्नेछ, "साह्रै नराम्रो विश्राम स्थल ।" अल्लाह तआला भन्नेछ, "के तिमी धर्ती भरिको स्वर्ण यसबाट छुटकारा प्राप्त गर्नको लागि यसको साटो स्वरूप दिन चाहनेछौ ?" त्यसले सकारात्मक उत्तर दिनेछ । अल्लाह तआला भन्नेछ, म त संसारमा यसभन्दा पनि निकै कमको माँग तिमीसित गरेको थिएँ, तिमीले त्यसको कुनै ध्यान दिएनौ र त्यसलाई पुन: नरकमा हाल्दिनेछ । (सहीह मुस्लिम सिफ़तुल क़ियाम: र सहीह बुख़ारी मुस्लिम अल-रिक़ाक वल अंबिया)

[2]यो आयत काफ़िरहरू (विश्वासहीन) को लागि छ किनभने ईमानवालाहरूलाई दण्डको उपरान्त नरकबाट निकालिनेछ जस्तो कि हदीसबाट यसको पुष्टि हुन्छ ।

[3]केही विचारकहरूका अनुसार चोरीको यो आदेश सामान्य छ । चोरी अलिकति कुराको होस् अथवा धैरै वस्तुको । यसैप्रकार त्यो सुरक्षित स्थानमा राखिएको होस् अथवा असुरक्षित स्थानमा राखिएको होस् प्रत्येक अवस्थामा चोरीको दण्ड दिइने छ । जबकि अरु विचारहरुका निकट यसको लागि सुरक्षित तथा निर्धारित स्थान आवश्यक छ । अनि मात्राको निर्धारणमा मतभेद छ । हदीसको ज्ञाताहरूको निकट कमसेकम मात्रा चौथाई दीनार अथवा तीन दिरहमको अथवा त्यसको समुल्यको कुनै कुरा होस्, यसबाट कमको चोरीमा हात काटिने छैन । यसैप्रकार हात कलाई (नाडीबाट) काटिनेछन्, कुहिनो अथवा काँधबाट होइन, जस्तो कि केहीको विचार छ । (विस्तृत जानकारीको लागि हदीस, फिक्ह तथा तफ़सीरका किताबहरुको अध्ययन गरियोस्)

مِّنَ اللّٰهِ ۗ وَاللّٰهُ عَزِيۡزٌ حَكِيۡمٌ ﴿٣٨﴾

तर्फबाट दण्ड हो, तथा अल्लाह तआ़ला शक्तिशाली तथा पूर्ण वैज्ञानिक छ ।

فَمَنۡ تَابَ مِنۡۢ بَعۡدِ ظُلۡمِهٖ وَاَصۡلَحَ فَاِنَّ اللّٰهَ يَتُوۡبُ عَلَيۡهِ ؕ اِنَّ اللّٰهَ غَفُوۡرٌ رَّحِيۡمٌ ﴿٣٩﴾

(३९) जो आफ्नो पापको पश्चात क्षमा माँग्दछ तथा सुधार गर्दछ, त अल्लाह (तआ़ला) दयाको रूपमा उसतिर आकर्षित हुन्छ ।[१] निःसन्देह अल्लाह तआ़ला क्षमाशील कृपानीधि छ ।

اَلَمۡ تَعۡلَمۡ اَنَّ اللّٰهَ لَهٗ مُلۡكُ السَّمٰوٰتِ وَالۡاَرۡضِ ؕ يُعَذِّبُ مَنۡ يَّشَآءُ وَيَغۡفِرُ لِمَنۡ يَّشَآءُ ؕ وَاللّٰهُ عَلٰى كُلِّ شَىۡءٍ قَدِيۡرٌ ﴿٤٠﴾

(४०) के तिमीलाई ज्ञात छैन कि अल्लाह (तआ़ला) को लागि आकाशहरु तथा धर्तीको राज्य छ ? जसलाई चाहन्छ दण्ड दिन्छ, जसलाई चाहन्छ क्षमा गरिदिन्छ । अल्लाह तआ़लालाई प्रत्येक कुरोको सामर्थ्य प्राप्त छ ।

يٰۤاَيُّهَا الرَّسُوۡلُ لَا يَحۡزُنۡكَ الَّذِيۡنَ يُسَارِعُوۡنَ فِى الۡكُفۡرِ مِنَ الَّذِيۡنَ قَالُوۡۤا اٰمَنَّا بِاَفۡوَاهِهِمۡ وَلَمۡ تُؤۡمِنۡ قُلُوۡبُهُمۡ ۛۚ وَمِنَ الَّذِيۡنَ هَادُوۡا ۛۚ سَمّٰعُوۡنَ لِلۡكَذِبِ سَمّٰعُوۡنَ لِقَوۡمٍ اٰخَرِيۡنَۙ لَمۡ يَاۡتُوۡكَ ؕ يُحَرِّفُوۡنَ الۡكَلِمَ

(४१) हे रसूल ! तपाईं उनीहरूको लागि दुःखी नहुनुहोस्, जो अविश्वासमा दौड लगाइराखेका छन् जसले आफ्ना मुखले भने कि हामीले विश्वास गर्‍यौं तथा उनका हृदयले विश्वास गरेनन्[२] तथा जो यहूदी भए, उनीमध्येबाट केही झूठो सुन्नका अभ्यासी तथा अन्य मानिसहरूका गुप्तचर छन्, जो तपाईंको पासमा आएनन् । उनीहरू शब्दलाई उनका स्थानबाट परिवर्तित गरिदिन्छन्, भन्दछन् कि यदि तिमी

[१]यस क्षमाबाट तात्पर्य अल्लाहकहाँ क्षमाको स्वीकृति हो, यो होइन कि क्षमा माँग्नाले चोरी अथवा कुनै दण्डनीय अपराधको दण्ड क्षमा भइहाल्ने छ । दण्ड संहिताहरू पश्चातापबाट क्षमा गरिने छैनन् ।

[२]नबी करीम सल्लल्लाहु अलैहि वसल्लमलाई कृतघ्न तथा मिश्रणवादीहरुबाट ईमान नल्याउनको कारण तथा सोझो मार्ग न अपनाउनको कारण जुन दुःख तथा खेद हुन्थ्यो, त्यसमा अल्लाह तआ़ला आफ्नो पैग़म्बरलाई अधिक दुखी नहुनुको निर्देश दिइराखेको छ ताकि यसप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई यो सन्तोष रहोस् कि यस्ता मानिसहरूको विषयमा अल्लाह तआ़ला मसित सोध्ने छैन ।

مِنۢ بَعۡدِ مَوَاضِعِهٖۚ يَقُولُونَ إِنۡ أُوتِيتُمۡ هَٰذَا فَخُذُوهُ وَإِن لَّمۡ تُؤۡتَوۡهُ فَٱحۡذَرُواْۚ

यो (आदेश) दिइनेछौ भने मानिहाल तथा यो दिइने छैनौं भने अलग्ग रह ।[1] र जसलाई

[1]आयत संख्या ४१ देखि ४४ सम्मको अवतरण हुने विषयमा दुई घटनाहरूको वर्णन छ। प्रथम दुई विवाहित यहूदी बलात्कारिहरू (पुरुष-स्त्री) का। उनीहरूले त आफ्नो किताब तौरातमा परिवर्तन गरिहालेका थिए, यसका अतिरिक्त त्यसका केही आदेशहरुको पालना पनि गर्दैनथे। यसैप्रकार पत्थरहरुले हिर्काइ विवाहित बलात्कारिहरूलाई मारिहाल्ने दण्डको आदेश उनको किताबमा थियो तथा अहिले पनि छ। परन्तु उनीहरू यस दण्डबाट बच्न पनि चाहन्थे यसकारण आपसमा निर्णय गरे कि महम्मद सल्लल्लाहु अलैहि वसल्लमको पासमा जान्छौं, यदि उनी हामीले बनाएको दण्ड कोर्राहरुको प्रहार अथवा मुख कालो गर्ने निर्णयलाई मानिहाल्छन् भने, मानिहाल्छौ तथा यदि ढुङ्गाले प्रहार गरी मारिहाल्ने कुराको निर्णय गर्छन भने, मान्दैनौं। अतः आदरणीय अब्दुल्लाह बिन उमर भन्नुहुन्छ कि यहूदी महम्मद सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थितिमा भए। उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सोध्नुभयो कि तौरातमा पत्थरहरुले प्रहार गरी मारिहाल्ने विषयमा के छ ? उनीहरूले भने तौरातमा बलात्कारको दण्ड कोर्रा हान्नु तथा अपमानित गर्नु हो अब्दुल्लाह बिन सलामले भनें कि तिमी झूठो बोल्दछौ, तौरातमा ढुङ्गाले प्रहार गरी मार्ने आदेश बिद्दमान छ, जाउ तौरात ल्याउ, तौरात ल्याई उनी पढ्न लागे त पत्थरले प्रहार गरी मार्नेवाली आयत (मन्त्र) मा हात राखेर अगाडी-पछाडीका आयतहरू पढिदिए। अब्दुल्लाह बिन सलामले भनें कि हात हटाउ, जब हात हटाइए त त्यहाँ पत्थरहरुले मार्ने आयत विद्यमान थियो। अन्ततः उनीहरूले स्वीकार गर्नुपर्‍यो कि महम्मद सल्लल्लाहु अलैहि वसल्लम साँचो भन्नुहुन्छ। तौरातमा पत्थरहरुबाट मार्ने दण्ड विद्यमान छ। अतः दुबै बलत्कारिहरूलाई ढुङ्गाले हानि-हानि मारियो। (हेर्नुस् सहीहैन तथा अन्य हदीसका पुस्तकहरु) एक अन्य घटनाको वर्णन यसप्रकार छ कि यहूदीहरूको एक क़बीला आफूलाई अर्को क़बीलाभन्दा अधिक श्रेष्ठ तथा सम्मानित ठान्दथ्यो र यसको अनुसार आफ्नो मारिएको व्यक्तिको आर्थिक दण्ड हत्याराबाट लिइने मूल्य सय (वस्तु) तथा दोस्रो क़बीलालाई पचास वस्क निर्धारित गरिएको थियो। जब नबी सल्लल्लाहु अलैहि वसल्लम मदीना पुग्नुभयो त यहूदीहरूको दोस्रो क़बीलालाई साहस भयो जसको हत्या गरिएको व्यक्तिको मुल्य हत्यारावाट आधी लिन्थ्यो तथा उसले रगतको मुल्य सय वस्कबाट दिन इन्कार गरिदियो। निकट थियो कि उनीहरूमध्ये युद्ध शुरु भइहालोस्, परन्तु तिनका समझदार मानिसहरू नबी सल्लल्लाहु अलैहि वसल्लमबाट निर्णय गराउन तयार भइहाल्यो। त्यस समय यो आयत उत्र्यो जसमा एक आयतमा रगतको मूल्यमा समानताको आदेश दिइयो। (यो कथा मुसनद अहमदमा छ, जसको प्रमाणलाई शेख़ अहमद शाक़िरले सही भन्नुभएको छ। मुसनद अहमद भाग १, पृष्ठ हदीस संख्या २२१२) इमाम इब्ने कसीरको कथन छ, सम्भव छ कि दुबै घटनाहरु एकै समयमा घटित भएका हुन् तथा ती सबैको लागि यी आयत अवतरित भएका हुन्। (इब्ने क़सीर)

وَمَنْ يُّرِدِ اللّٰهُ فِتْنَتَهٗ فَلَنْ تَمْلِكَ لَهٗ مِنَ اللّٰهِ شَيْـًٔا ؕ اُولٰٓئِكَ الَّذِيْنَ لَمْ يُرِدِ اللّٰهُ اَنْ يُّطَهِّرَ قُلُوْبَهُمْ ؕ لَهُمْ فِي الدُّنْيَا خِزْيٌ ۚۖ وَّلَهُمْ فِي الْاٰخِرَةِ عَذَابٌ عَظِيْمٌ ﴿۴۱﴾

अल्लाह मार्ग-विचलित गर्न चाहन्छ त्यसको लागि अल्लाहमाथि तपाईंको अलिकति पनि अधिकार छैन । यिनैका हृदयलाई अल्लाह पवित्र गर्न चाहँदैन । यिनैको लागि संसारमा अपमान तथा आख़िरत (परलोक) मा ठूलो दण्ड छ ।

سَمّٰعُوْنَ لِلْكَذِبِ اَكّٰلُوْنَ لِلسُّحْتِ ؕ فَاِنْ جَآءُوْكَ فَاحْكُمْ بَيْنَهُمْ اَوْ اَعْرِضْ عَنْهُمْ ۚ وَاِنْ تُعْرِضْ عَنْهُمْ فَلَنْ يَّضُرُّوْكَ شَيْـًٔا ؕ وَاِنْ حَكَمْتَ فَاحْكُمْ بَيْنَهُمْ بِالْقِسْطِ ؕ اِنَّ اللّٰهَ يُحِبُّ الْمُقْسِطِيْنَ ﴿۴۲﴾

(४२) यी कान थापी-थापी झूठो कुरा सुन्ने[१] तथा निकै अवैध कुरा खानेहरू हुन् । यदि यिनीहरू तिम्रो पासमा आउँछन् भने तिमीलाई अधिकार छ कि चाहन्छौ भने तिनका बीच निर्णय गरिदेउ, चाहन्छौ भने नगर, यदि तिमी उनीहरूलाई बेवास्ता राख्छौ तैपनि यिनीहरू कुनै हानि पुऱ्याउन सक्दैनन् र यदि तिमी निर्णय गर्छौ भने उनमा न्यायसाथ निर्णय गर, नि:सन्देह न्याय गर्नेसँग अल्लाह तआ़ला प्रेम गर्दछ ।

وَكَيْفَ يُحَكِّمُوْنَكَ وَعِنْدَهُمُ التَّوْرٰىةُ فِيْهَا حُكْمُ اللّٰهِ ثُمَّ يَتَوَلَّوْنَ مِنْۢ بَعْدِ ذٰلِكَ ؕ وَمَآ اُولٰٓئِكَ بِالْمُؤْمِنِيْنَ ﴿۴۳﴾

(४३) तथा (आश्चर्य कुरा यो छ कि) उनी कसरी आफ्नो पासमा तौरात हुँदा, जसमा अल्लाहको आदेश छ, तिमीलाई निर्णायक बनाउँछन् । अनि त्यस पश्चात मुख फर्काउँछन् । वास्तवमा यिनी ईमान तथा विश्वास भएका होइनन् ।

اِنَّآ اَنْزَلْنَا التَّوْرٰىةَ فِيْهَا هُدًى وَّنُوْرٌ ۚ يَحْكُمُ بِهَا النَّبِيُّوْنَ

(४४) हामीले तौरात अवतरित गऱ्यौं जसमा मार्गदर्शन तथा प्रकाश ज्योति छ । यहूदीहरूमा यसै तौरात

[१] (سماعون) (सम्माऊना) को अर्थ हो "अत्याधिक सुन्नेवाला" यसका दुई भावार्थ हुनसक्छन् । भेद जान्नको लागि धेरै अधिक सुन्नु अथवा अरुहरूका कुरा जान्नको लागि सुन्नु । केही व्याख्याकारहरूले पहिला अर्थ लिएका छन् र केहीले दोस्रो ।

الَّذِينَ أَسْلَمُوا لِلَّذِينَ هَادُوا وَالرَّبَّانِيُّونَ وَالْأَحْبَارُ بِمَا اسْتُحْفِظُوا مِن كِتَابِ اللَّهِ وَكَانُوا عَلَيْهِ شُهَدَاءَ ۚ فَلَا تَخْشَوُا النَّاسَ وَاخْشَوْنِ وَلَا تَشْتَرُوا بِآيَاتِي ثَمَنًا قَلِيلًا ۚ وَمَن لَّمْ يَحْكُم بِمَا أَنزَلَ اللَّهُ فَأُولَٰئِكَ هُمُ الْكَافِرُونَ ﴿٤٤﴾

द्वारा अल्लाहलाई मान्ने,[१] अंबिया (अलैहिमुस्सलाम) तथा अल्लाहका भक्त र ज्ञानीहरूले निर्णय गर्ने गर्थे किनभने उनीहरूलाई अल्लाहको यस किताबको सुरक्षाको आदेश दिइएको थियो ।[२] तथा उनीहरू त्यसका संरक्षक थिए ।[३] अब तिमी मानिसहरूसित नतर्स बरु मसित तर्स, मेरा आयतहरूलाई थोरै-थोरै मूल्यमा नबेच[४] र जो

---

[१](أسلموا) (असलमू) यो नबीहरूको विशेषताको वर्णन हो कि ती सबै नबी इस्लाम धर्मका अनुयायी थिए, जसतिर मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम आमन्त्रण दिइरहनु भएको छ । अर्थात् सबै नबीहरूको धर्म एउटै रहेको छ । इस्लाम जसको आधारशिला हो कि एक अल्लाहको इबादत (उपासना) तथा त्यसको इबादतमा कसैलाई सम्मिलित नगरियोस् । प्रत्येक नबीले सर्वप्रथम एकेश्वरवाद तथा त्यसको साथमा कसैलाई पनि सम्मिलित नगर्नुको आमन्त्रण दिनुभयो ।

﴿وَمَا أَرْسَلْنَا مِن قَبْلِكَ مِن رَّسُولٍ إِلَّا نُوحِي إِلَيْهِ أَنَّهُ لَا إِلَٰهَ إِلَّا أَنَا فَاعْبُدُونِ﴾

"हामीले तपाईंभन्दा पूर्व जति रसूल पठायौं, सबैलाई यही प्रकाशना (वह्यी) गर्यौं कि मेरो अतिरिक्त कोही पूज्य छैन, तसर्थ तिमी सबै मेरो इबादत (बन्दना) गर ।" सूर: अल-अंबिया-२५)

यसलाई कुरआनमा (الدين) (अद-दीन) पनि भनिएको छ । जस्तो कि सूर: शूरको आयत संख्या १३ मा पनि यसै विषयको वर्णन गरिएको छ ।

﴿شَرَعَ لَكُم مِّنَ الدِّينِ مَا وَصَّىٰ بِهِ نُوحًا﴾

"हामीले तपाईंको लागि त्यही धर्म निर्धारित गरेका छौं, जुन तपाईंभन्दा पूर्व अन्य नबीहरुका लागि गरेका थियौं ।"

[२]अत: उनीहरूले तौरातमा कुनै परिवर्तन गरेनन्, जुनप्रकार पछि मानिसहरूले गरे ।

[३]कि यो किताब कुनै कमी अथवा अधिकताबाट सुरक्षित छ र अल्लाहको तर्फबाट अवतरित गरिएको छ ।

[४]अर्थात् मानिसहरूसित तर्सेर तौरातको वास्तविक आदेशमा आवरण नहाल, न संसारको अलिकति लाभको लागि तिनमा परिवर्तन गर ।

अल्लाहबाट अवतरित गरिएका प्रकाशनाहरू (वह्‌यी) को आधारमा निर्णय गर्दैनन्, उनी पूर्ण तथा परिपक्व काफ़िर हुन् ।[1]

وَكَتَبْنَا عَلَيْهِمْ فِيهَا أَنَّ النَّفْسَ بِالنَّفْسِ وَالْعَيْنَ بِالْعَيْنِ وَالْأَنفَ بِالْأَنفِ وَالْأُذُنَ بِالْأُذُنِ وَالسِّنَّ بِالسِّنِّ وَالْجُرُوحَ قِصَاصٌ ۚ فَمَن تَصَدَّقَ بِهِ فَهُوَ كَفَّارَةٌ لَّهُ ۚ وَمَن لَّمْ يَحْكُم بِمَا أَنزَلَ اللَّهُ فَأُولَٰئِكَ هُمُ الظَّالِمُونَ ﴿٤٥﴾

(४५) र हामीले (तौरात) मा यहूदीहरूका अधिकारमा यो कुरा निर्धारित गरिदिएका छौं कि ज्यानको बदला ज्यान र आँखाको बदला आँखा तथा नाकको बदला नाक एवं कानको बदला कान र दाँतको बदला दाँत तथा विशेष घाउहरुको पनि बदला छ ।[2] अनि जो व्यक्ति उसलाई क्षमा गरिदिन्छ त त्यो त्यसको लागि प्रायश्चित हो तथा जो अल्लाहका आदेशहरुका अनुसार निर्णय गर्दैनन्, ती नै अत्याचारी हुन् ।[3]

---

[1]अनि कसरी तिमी ईमानको साटो कुफ़्र (अविश्वास) को लागि तैयार भइहाल्यौ ?

[2]जब तौरातमा प्राणको बदला प्राण तथा घाउहरुमा बदलाको आदेश दिइएको थियो त यहूदीहरूको एक क़बीला (बनू-नजीर) लाई अर्को क़बीला (बनू कुरैज़ा) सित यसको अतिरिक्त व्यवस्था गर्न तथा आफ्नो हतद्वारा मृतकको बदला अन्य क़बीलाहरुमा दुई गुना लिनुको के औचित्य छ ? जस्तो कि यसको विस्तृत जानकारी पछिल्ला पृष्ठहरुमा आइसकेको छ ।

[3]यो यस कुरातिर संकेत हो कि जुन क़बीलाले उपरोक्त निर्णय गरेको थियो, यो अल्लाहद्वारा उतारिएका आदेशको विपरीत थियो तथा यसप्रकार उनीहरूले अत्याचार गरे । अर्थात् मनुष्य यस कुराको लागि प्रतिबन्धित छ कि त्यो अल्लाहका आदेशहरुलाई अपनाओस् तथा उसैको आधारमा निर्णय गरोस् तथा जीवनका सबै समस्याहरुमा उसैको प्रकाशमा समाधान निकालोस् । यदि त्यसले यस्तो गर्नेछैन भने अल्लाह तआ़लाको समक्ष अत्याचारी तथा दुराचारी एवं काफ़िर मानिने छ । यस्ता मानिसहरूका लागि अल्लाह तआ़लाले तीनवटै शब्द प्रयोग गरेर आफ्नो क्रोधको प्रदर्शन गरेको छ । यसको उपरान्त पनि मनुष्य आफूले बनाएका नियमहरु तथा आफ्ना इच्छाहरूलाई श्रेष्ठता दिन्छ भने यसभन्दा ठूलो दुर्भाग्य के हुनेछ ?

**टिप्पणी :** धर्मशास्त्रीहरूले लेखेका छन् कि पछिल्ला धर्महरुका जुन नियमहरुको आदेश अल्लाह तआ़लाले निरन्तर राखेको छ, हाम्रो लागि पनि त्यसको अनुसार कर्म गर्नु आवश्यक छ र यस आयतमा वर्णित आयत निरस्त भएका छैनन् । यसकारण यी पनि इस्लाम धर्मका नियमहरुका आदेश हुन् ।

وَقَفَّيْنَا عَلَىٰٓ اٰثَارِهِمْ بِعِيْسَى ابْنِ مَرْيَمَ مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ مِنَ التَّوْرٰىةِ ۪ وَاٰتَيْنٰهُ الْاِنْجِيْلَ فِيْهِ هُدًى وَّنُوْرٌ ۙ وَّمُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ مِنَ التَّوْرٰىةِ وَهُدًى وَّمَوْعِظَةً لِّلْمُتَّقِيْنَ ۝

(४६) र हामीले उनको पछि ईसा पुत्र मरियमलाई पठायौं, जो आफ्नो पूर्वको किताब अर्थात् तौरातको पुष्टि गर्ने थिए ।[1] तथा हामीले उनलाई इंजील प्रदान गऱ्यौं जसमा प्रकाश तथा मार्गदर्शन थियो तथा त्यसले आफ्नो भन्दा पूर्वको किताब तौरातको पुष्टि गर्दथ्यो तथा त्यो स्पष्ट मार्गदर्शन तथा शिक्षा थियो अल्लाह तआ़लासित तर्सनेहरूका लागि ।[2]

जस्तो कि हदीसबाट यसको पुष्टि हुन्छ । यसैप्रकार हदीसमा (النفس بالنفس) (ज्यानको बदला ज्यान) को सामान्य आदेशबाट दुई अवस्थाहरु अलग छन् कि कुनै मुसलमान यदि कुनै काफ़िरको हत्या गरिदिन्छ भने बदलामा त्यस मुसलमानलाई त्यसैप्रकार गुलाम (दास) को बदला स्वतन्त्रलाई हत गरिने छैन । (विस्तारको लागि हेर्नुस् फ़तहुल बारी र नैलुल अवतार आदि)

[1]अर्थात् विगत नबीहरुको तत्पश्चात नै आदरणीय ईसालाई पठायो जो आफ्नो पूर्व उतारिएको किताब तौरातको पुष्टि गर्नेवाला थिए, त्यसलाई झुठ्लाउनेवाला थिएनन्, जुन यस कुराको प्रमाण हो कि आदरणीय ईसा पनि अल्लाहका सत्य रसूल हुन् र त्यसै अल्लाहद्वारा पठाइएका हुन् जसले आदरणीय मूसामाथि तौरात अवतरित गरे, यसको उपरान्त पनि यहूदीहरूले आदरणीय ईसा अलैहिस्सलामलाई झूठा भने, तथा उनका आदेशहरुको विरोध र अनादर एवं अपमान गरे ।

[2]अर्थात् जुनप्रकार तौरात आफ्नो समयमा मानिसहरूको मार्गदर्शनको साधन थियो । यसैप्रकार इंजीलको अवतरण पश्चात यही स्थान इंजीललाई प्राप्त भइहाल्यो तथा पछि कुर्आन करीमको अवतरण पश्चात तौरात तथा इंजील तथा आकाशीय पुस्तकहरुका आदेश अनुसार कर्म गर्न निरस्त गरियो तथा मार्गदर्शन एवं मोक्षको मात्र एक साधन पवित्र कुर्आन रहयो र यसैमा अल्लाह तआ़लाले आकाशीय किताबहरुको श्रृंखला समाप्त गरिदिए । अत: यो यस कुराको घोषणा हो कि केयामतसम्म जन्म लिनेवाला सबै मनुष्यहरूको भलाई तथा सफलता यसै कुर्आनसित सम्बन्धित छ, जो यससँग सम्बन्धित भयो, सम्मानित भइहाल्यो, जो अलग भयो असफलता तथा अपमान त्यसको भाग्य बनिहाल्यो । यसबाट ज्ञात भयो कि सर्व धर्म संभाव:को विचार एकदम अनुचित छ, सत्य हरेक समयमा एउटै रहिआएको छ, अनेक होइन । सत्यको अतिरिक्तप्रत्येक असत्य छ । तौरात आफ्नो समयको सत्य थियो, त्यसको पश्चात इंजील आफ्नो समयको सत्य थियो, इंजीलको अवतरण पश्चात तौरातका अनुसार कार्य उचित थिएन, तथा जब कुर्आन अवतरित भयो, त इंजील निरस्त भइहाल्यो,

وَلْيَحْكُمْ أَهْلُ الْإِنجِيلِ بِمَا أَنزَلَ اللَّهُ فِيهِ ۚ وَمَن لَّمْ يَحْكُم بِمَا أَنزَلَ اللَّهُ فَأُولَٰئِكَ هُمُ الْفَاسِقُونَ ﴿٤٧﴾

(४७) तथा इंजील प्राप्त गर्नेहरूलाई पनि आवश्यक छ कि अल्लाह तआलाले जे-जति इंजीलमा अवतरित गरेको छ, त्यसै अनुसार आदेश गरून् ।[1] तथा जो अल्लाह तआलाद्वारा अवतरित गरिएकोबाटै नै आदेश गर्दैनन् उनीहरू कुकर्मी हुन् ।

وَأَنزَلْنَا إِلَيْكَ الْكِتَابَ بِالْحَقِّ مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ مِنَ الْكِتَابِ وَمُهَيْمِنًا عَلَيْهِ ۖ فَاحْكُم بَيْنَهُم بِمَا أَنزَلَ اللَّهُ ۖ وَلَا تَتَّبِعْ أَهْوَاءَهُمْ عَمَّا جَاءَكَ مِنَ الْحَقِّ ۚ لِكُلٍّ جَعَلْنَا مِنكُمْ

(४८) तथा हामीले तपाईंतिर सत्यले परिपूर्ण यो किताब उतारेका छौं, जुन आफूभन्दा पूर्वका सबै किताबहरूको पुष्टि गर्दछ तथा उनको रक्षक हो ।[2] यसकारण तपाईं उनीहरूबीच अल्लाहद्वारा अवतरित गरिएको किताब अनुसार निर्णय गर्नुस्[3] यस सत्यबाट हटेर उनीहरूका

इंजील अनुसार कार्य उचित रहेन तथा केवल कुर्आन नै मात्र एक कार्यक्रम तथा मोक्षको लागि कर्मकाण्ड रहेको छ। यसमा आस्था बिना अर्थात् मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको नबूअत (दूतत्व) लाई स्वीकार नगरिकन मोक्ष सम्भव छैन र जानकारीको लागि हेर्नुस् सूरः अल-बकरःको आयत संख्या ६२ को व्याख्या ।

[1]इंजीलका अनुपालकहरूलाई यो आदेश त्यसबेलासम्म थियो, जबसम्म आदरणीय ईसाको नबूवतको काल थियो। नबी सल्लल्लाहु अलैहि वसल्लमको आगमनको पश्चात आदरणीय ईसाको नबूअतको समय पनि समाप्त भइहाल्यो । तथा इंजीलको आदेशहरूको पालना पनि समाप्त भइहाल्यो। अब ईमानवाला त्यसैलाई ठानिनेछ जसले मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालत (दूतत्व) मा ईमान ल्याउनेछ र कुर्आन करीमका आदेशहरुको पालना गर्नेछ ।

[2]प्रत्येक आसमानी किताब आफूभन्दा पूर्वका आसमानी किताबहरुको पुष्टि गर्नेवाला रहेको छ, जुनप्रकार कुर्आन भूतपूर्व आकाशीय किताबहरुको पुष्टि गर्नेवाला छ। पुष्टिको अर्थ यो हो कि यी सवै किताबहरु वास्तवमा अल्लाहबाट नै अवतरित किताबहरु हुन् । परन्तु कुर्आन प्रमाण शास्त्रहरूका साथ-साथै (مهيمن) (रक्षक, विश्वास साक्षी तथा निर्णायक) पनि छ। अर्थात पूर्वका किताबहरुका परिवर्तन पनि भएको कारण कुर्आनको निर्णय मान्य हुनेछ, जसलाई यो उचित भन्नेछ, त्यो उचित, शेष अनुचित तथा असत्य छ ।

[3]यसभन्दा पूर्व आयत संख्या ४६ मा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई यो अधिकार दिइएको थियो कि तपाई उनका विवादमा निर्णय गर्नुस् अथवा नगर्नुस्, तपाईंको इच्छा हो । परन्तु अब यसको स्थानमा त्यो आदेश दिइराखिएको छ कि उनका आपसी विवादहरुको पनि निर्णय, कुर्आनको आदेश अनुसार नै गर्नुस् ।

شِرْعَةً وَّمِنْهَاجًا ؕ وَلَوْ شَآءَ اللّٰهُ لَجَعَلَكُمْ اُمَّةً وَّاحِدَةً وَّلٰكِنْ لِّيَبْلُوَكُمْ فِيْ مَآ اٰتٰىكُمْ فَاسْتَبِقُوا الْخَيْرٰتِ ؕ اِلَى اللّٰهِ مَرْجِعُكُمْ جَمِيْعًا فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ فِيْهِ تَخْتَلِفُوْنَ ﴿٤٨﴾

इच्छा अनुसार नजानुस् ।[1] तिमीमध्ये प्रत्येकको लागि हामीले एउटा विधान तथा मार्ग निर्धारित गरिदिएका छौं ।[2] यदि अल्लाहले चाहेको भए तिमी सबैलाई एउटै समुदाय बनाइदिन्थ्यौं, परन्तु त्यो चाहन्छ कि जे तिमीलाई दिइएको छ, त्यसमा तिम्रो परीक्षा लिइयोस् ।[3] तिमी पुण्यतिर शीघ्रता गर, तिमी सबैलाई अल्लाहतिर नै फर्किजानु छ, अनि त्यसले तिमीलाई हरेक त्यो कुरो भन्नेछ, जसमा तिमी मतभेद राख्दछौ ।

وَاَنِ احْكُمْ بَيْنَهُمْ بِمَآ اَنْزَلَ اللّٰهُ وَلَا تَتَّبِعْ اَهْوَآءَهُمْ

(४९) तथा तपाईं उनका विवादमा अल्लाहद्वारा अवतरित गरिएका प्रकाशनाहरू (वह्यी) का अनुसार

[1]यो वास्तवमा अनुयायीहरूलाई शिक्षा दिइराखिएको छ कि अल्लाहको अवतरित किताबबाट हटेर मानिसहरूका इच्छा तथा विचारहरु तथा उनका स्वयं आफूले बनाएका नियम अनुसार निर्णय गर्नु विचलन हो, जसको आज्ञा पैग़म्बर (ईशदूत) लाई छैन, त कुनै अन्यलाई यो अधिकार कुन प्रकार प्राप्त हुनसक्छ ।

[2]यसबाट तात्पर्य पूर्वका धार्मिक नियम हुन्, जसमा केही आदेश एक-अर्कासित भिन्न थिए । एउटा धर्मको नियममा कुनै कुरा अवैध तथा अर्को धर्मको नियममा त्यही वैध थियो । केहीमा कुनै समस्यामा कडाई थियो त अर्कोमा सुविधा थियो । परन्तु धर्म सबै एक अर्थात् एकेश्वरवादमा आधारित थियो । यसप्रकार सबैको आमन्त्रण वर्णन गरियो ।

نحن معاشر الأنبياء إخوةٌ لِعَلَّات، دِينُنَا وَاحِدٌ

"हामी नबीहरूको गुट अल्लाती भाई हो, हाम्रो धर्म एक छ ।" (सहीह बुख़ारी)

"अल्लाती भाई" ती हुन्छन, जसका माताहरू भिन्न हुन्छन् परन्तु पिता एक हुन्छ । अतः यसको अर्थ यो भयो कि यिनको धर्म एउटै थियो, तर धार्मिक नियम भिन्न थिए । तर इस्लामिक नियम उपरान्त अब सबै नियम निरस्त भइहाले तथा अब धर्म पनि एक छ र नियम पनि एक छ ।

[3]अर्थात् कुर्आनको अवतरण पश्चात अब मोक्ष त यसैसित सम्बन्धित छ । परन्तु हामीलाई मोक्षको मार्गलाई अपनाउन अल्लाह तआलाले कुनै दबाब गरेको छैन, नत्र त्यो चाहेको भए यस्तो गर्न सक्दथ्यो, परन्तु यसप्रकार तिम्रो परीक्षा सम्भव थिएन, जबकि त्यो तिम्रो परीक्षा लिन चाहन्छ ।

وَاحْذَرْهُمْ أَنْ يَفْتِنُوكَ عَنْ بَعْضِ مَا أَنْزَلَ اللَّهُ إِلَيْكَ ۖ فَإِنْ تَوَلَّوْا فَاعْلَمْ أَنَّمَا يُرِيدُ اللَّهُ أَنْ يُصِيبَهُمْ بِبَعْضِ ذُنُوبِهِمْ ۗ وَإِنَّ كَثِيرًا مِنَ النَّاسِ لَفَاسِقُونَ ﴿٤٩﴾

निर्णय दिनुस्। उनका ईच्छाहरूको पालना नगर्नुस् तथा उनीबाट सावधान रहनुस् कि कहीं यिनीहरूले तपाईंलाई अल्लाह द्वारा अवतरित गरिएको कुनै आदेशबाट विचलित नगरिदेउन्, यदि उनीहरू विमुख हुन्छन् भने विश्वास गर कि अल्लाहको यही विचार छ कि उनीहरूलाई उनका केही पापहरूको दण्ड देओस्, तथा अधिकतर मानिसहरू अवज्ञाकारी हुन्छन्।

أَفَحُكْمَ الْجَاهِلِيَّةِ يَبْغُونَ ۚ وَمَنْ أَحْسَنُ مِنَ اللَّهِ حُكْمًا لِقَوْمٍ يُوقِنُونَ ﴿٥٠﴾

(५०) के यिनीहरू पुन: अज्ञानको निर्णय चाहन्छन्?[1] र विश्वास गर्नेहरूको लागि अल्लाह तआ़ला भन्दा निर्णयक तथा आदेश गर्नेको हुनसक्छ।[2]

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَتَّخِذُوا الْيَهُودَ وَالنَّصَارَىٰ أَوْلِيَاءَ ۘ بَعْضُهُمْ

(५१) हे ईमान भएकाहरू! तिमी यहूदी तथा इसाईहरूलाई मित्र नबनाऊ।[3] यी त आपस

[1]अब कुर्आन तथा इस्लामको अतिरिक्त सबै अज्ञान छ तथा यिनीहरू अहिले पनि प्रकाश तथा मार्गदर्शन (इस्लाम) लाई छाडेर अज्ञानताकै खोजमा तथा त्यसका इच्छुक छन्? यो प्रश्न इन्कार एवं प्रतिकारको लागि छ तथा فا लिप्त शब्दतिर तथा अर्थ छ।

يعرضون عن حكمك بما أنزل الله عليك و يتولون عنه، يبتغون حكم الجاهلية

"तिम्रो यस निर्णयबाट जुन अल्लाहले तिमीमाथि अवतरित गरेको छ, यी इन्कार गर्छन् तथा पिठ्यूँ फर्काउन्छन् तथा अज्ञानताको मार्गको खोजीमा छन्।" (फ़तहुल क़दीर)

[2]हदीसमा वर्णन छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो:

أَبْغَضُ النَّاسِ إِلَى اللهِ عزّ وجلّ ثَلَاثَةٌ : مُبْتَغٍ فِي الإِسلَامِ سُنَّةَ الجَاهِلِيَّةِ ، وَطَالِب دَمِ أَمْرِىءٍ بِغَيرِ حَقٍّ لِيُرِيقَ دَمَهُ

"अल्लाह तआ़लालाई सबैभन्दा धेरै अप्रिय व्यक्तिहरु छन् त्यो (१) जो इस्लाममा अज्ञानताको रीतिको खोज गर्दछ। (२) र जो अनर्थ कसैको रगत बगाउने प्रयत्न गर्दछ।" (सहीह बुख़ारी किताबुल दीयात)

[3]यसमा यहूदी तथा ईसाइहरूसित मित्रता तथा प्रेम सम्बन्ध स्थापित गर्नुबाट मनाही गरिएको छ, जुन इस्लाम धर्म तथा मुसलमानहरूका शत्रु हुन् र यसमा यति ठूलो चेतावनी दिइएको छ कि जो उनीसित मित्रता राख्नेछ, त्यो उनीमध्येबाट नै ठानिनेछ। (र हेर्नुस् सूरः आले-इमरान आयत संख्या-२८ तथा आयत संख्या ११८ को व्याख्या)

أَوْلِيَاءُ بَعْضٍ ۚ وَمَن يَتَوَلَّهُم مِّنكُمْ فَإِنَّهُ مِنْهُمْ ۗ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٥١﴾

मा नै एक अर्काका मित्र हुन् ।[१] तिमीमध्येबाट जो कोही पनि यिनीहरूसित मित्रता गर्छ त त्यो तिनै मध्येबाट हुन्छ, अत्याचारीहरूलाई अल्लाह तआला कदापि मार्गदर्शन दिंदैन ।[२]

فَتَرَى الَّذِينَ فِي قُلُوبِهِم مَّرَضٌ يُسَارِعُونَ فِيهِمْ يَقُولُونَ نَخْشَىٰ أَن تُصِيبَنَا دَائِرَةٌ ۚ فَعَسَى اللَّهُ أَن يَأْتِيَ بِالْفَتْحِ أَوْ أَمْرٍ مِّنْ عِندِهِ فَيُصْبِحُوا عَلَىٰ مَا أَسَرُّوا

(५२) तपाईंले हेर्नु हुनेछ कि जसको हृदयमा रोग छ,[३] तिनी दगुरी-दगुरी उनीहरूमा पसिराखेका छन् तथा भन्छन् कि हामीलाई भय छ कि यस्तो नहोस् कि कुनै घटना हामीमाथि घटित होस् ।[४] धेरै सम्भव छ कि अल्लाह (तआला) ले विजय प्रदान गरोस्[५] अथवा आफ्नो पासबाट कुनै अन्य निर्णय

[१]कुर्आनको यस वर्णित सत्यको प्रत्येक दर्शन प्रत्येक व्यक्ति गर्न सक्दछ कि यहूदी तथा ईसाईहरूमा आपसमा निष्ठाको आधारमा अत्याधिक मतभेद तथा आपसी ईर्ष्या तथा द्वेष छ । परन्तु यसका उपरान्त पनि इस्लाम तथा मुसलमानहरूका विरूद्ध यिनी आपसमा एक-अर्काका सहायक मित्र तथा रक्षक छन् ।

[२]यी आयतहरूको अवतरणको विशेषतामा वर्णन गरिन्छ कि आदरणीय ओबाद: बिन साबित अन्सारी तथा अवसरवादीहरूका प्रमुख अब्दुल्लाह बिन उबैय दुबै अज्ञानकालमा यहूदीका मित्र भई आइराखेका थिए । जब बद्रको युद्धमा मुसलमानहरूको विजय भयो त अब्दुल्लाह बिन उबैयले इस्लाम धर्मको प्रदर्शन गरे । यता बनु केनुकाअका यहूदीहरूले अलि दिन पश्चात नै उपद्रव उत्पन्न गरे र उनी समातिए जसमा आदरणीय ओबाद:ले यहूदी मित्रहरूबाट सम्बन्ध विच्छेदको घोषणा गरिदिए, परन्तु यसको विपरीत अब्दुल्लाह बिन उबैयले यहूदीहरूलाई हरप्रकारले बचाउने प्रयास गरे जसमा यो आयत उत्र्यो ।

[३]यसबाट तात्पर्य द्वयवाद (निफ़ाक़) छ, अर्थात् अवसरवादी यहूदीहरूसित प्रेम तथा मित्रतामा शीघ्रता गर्दछन् ।

[४]अर्थात् मुसलमानहरूको पराजय हुनुको कारण हामीलाई पनि हानि खप्नुपर्‍यो । यहूदीहरूबाट मित्रता हुन्छ भने हामीलाई यस्तो अवसरमा काम आउनेछ ।

[५]अर्थात मुसलमनहरूलाई ।

فِىٓ اَنۡفُسِهِمۡ نٰدِمِيۡنَ ؕ

ल्याओस् ।[1] अनि त यिनी आफ्ना हृदयमा लुकेका कुरामाथि अत्याधिक लज्जित हुनेछन् ।

وَيَقُوۡلُ الَّذِيۡنَ اٰمَنُوۡۤا اَهٰٓؤُلَاۤءِ الَّذِيۡنَ اَقۡسَمُوۡا بِاللّٰهِ جَهۡدَ اَيۡمَانِهِمۡ ۙ اِنَّهُمۡ لَمَعَكُمۡ ؕ حَبِطَتۡ اَعۡمَالُهُمۡ فَاَصۡبَحُوۡا خٰسِرِيۡنَ ﴿۵۳﴾

(५३) तथा निष्ठावानहरूले भन्नेछन् कि के यिनै ती मानिसहरू हुन् जो बडो विश्वासले अल्लाहको कसम खाई-खाई भन्दछन् कि हामी तिम्रो साथमा छौं । उनका कर्म नष्ट भए तथा उनीहरू असफल भइहाले ।

يٰۤاَيُّهَا الَّذِيۡنَ اٰمَنُوۡا مَنۡ يَّرۡتَدَّ مِنۡكُمۡ عَنۡ دِيۡنِهٖ فَسَوۡفَ يَاۡتِى اللّٰهُ بِقَوۡمٍ يُّحِبُّهُمۡ وَيُحِبُّوۡنَهٗۤ ۙ اَذِلَّةٍ عَلَى الۡمُؤۡمِنِيۡنَ اَعِزَّةٍ عَلَى الۡكٰفِرِيۡنَ يُجَاهِدُوۡنَ فِىۡ سَبِيۡلِ اللّٰهِ وَلَا يَخَافُوۡنَ لَوۡمَةَ لَاۤئِمٍ ؕ ذٰلِكَ فَضۡلُ اللّٰهِ

(५४) हे निष्ठावानहरू ! तिमीमध्ये जो आफ्नो धर्मबाट विमुख हुन्छ,[2] त अल्लाह (तआला) निकै शीघ्र यस्ता समुदायका मानिसहरूलाई ल्याउनेछ जो अल्लाहका प्रिय हुनेछन् तथा उनी पनि अल्लाहसित प्रेम गर्ने हुनेछन्,[3] उनी मुसलमानहरू प्रति नरम (कोमल) तथा अविश्वासी प्रति कठोर हुनेछन् अल्लाहको मार्गमा धर्मयुद्ध गर्नेछन् कुनै अपमानित गर्ने व्यक्तिको

[1]यहूदी तथा इसाईहरूमाथि सुरक्षाकर (जिज़्या) लगाइदेओस् अथवा यसतिर संकेत छ कि बनू कुरैजा तथा उनका सन्तानहरूलाई बन्दी बनाउने तथा बनू नजीरलाई देश निकाला दिने आदितिर जो निकट भविष्यमा घटित भयो ।

[2]अल्लाह तआलाको तर्फबाट भविष्यवाणी छ जुन नबी सल्लल्लाहु अलैहि वसल्लमको देहान्त पश्चात घटित भयो । यस उपद्रवलाई कुल्चिने श्रेय आदरणीय अबू बक्र (رضی الله عنه) तथा उनका साथीहरूलाई प्राप्त भयो ।

[3]मुर्तद (धर्मको कुनै नियममा विश्वास नगर्नेवाला) को प्रतिकूल जुन समुदायलाई अल्लाह तआला उभ्याउनेछ, उनका चार गुणहरूलाई स्पष्ट गरेर वर्णन गरिदैछ । (१) अल्लाहसित प्रेम गर्नु तथा उसको प्रिय हुनु, (२) ईमानवालाहरूको लागि कौम तथा काफ़िरहरूको लागि कठोर हुनु, (३) अल्लाहको मार्गमा धर्मयुद्ध गर्नु, (४) अल्लाहको विषयमा कसैलाई अपमानित गर्नुको चिन्ता नगर्नु । सहाबा किराम (رضی الله عنهم) यी गुण तथा विशेषताहरूबाट सुशोभित थिए । अत: अल्लाह तआलाले उनीहरूलाई संसार तथा आख़िरतका सबै सुखहरूबाट पुरस्कृत गऱ्यो तथा संसारमा नै आफ्नो प्रसन्नताको प्रमाण-पत्र उनीहरूलाई प्रदान गरिदियो ।

يُؤْتِيهِ مَن يَشَآءُ ۚ وَٱللَّهُ وَٰسِعٌ عَلِيمٌ ﴿٥٤﴾

अपमान गर्ने कुराको चिन्ता गर्ने छैनन् ।[1] यो हो अल्लाह (तआला) को कृपा जसलाई चाहन्छ प्रदान गर्दछ । अल्लाह तआला सर्वशक्तिमान छ तथा सर्वज्ञ छ ।

إِنَّمَا وَلِيُّكُمُ ٱللَّهُ وَرَسُولُهُۥ وَٱلَّذِينَ ءَامَنُوا۟ ٱلَّذِينَ يُقِيمُونَ ٱلصَّلَوٰةَ وَيُؤْتُونَ ٱلزَّكَوٰةَ وَهُمْ رَٰكِعُونَ ﴿٥٥﴾

(५५) (मुसलमानहरू) ! तिम्रो मित्र स्वयं अल्लाह तथा त्यसका रसूल छन्, एवं ईमानवाला छन्,[2] जो नमाजहरूलाई स्थापित गर्दछन् तथा ज़कात दिन्छन् तथा उनी रूकूउ (दण्डवत) (श्रद्धायुक्त तथा ध्यानमग्न भई) गर्दछन् ।

وَمَن يَتَوَلَّ ٱللَّهَ وَرَسُولَهُۥ وَٱلَّذِينَ ءَامَنُوا۟ فَإِنَّ حِزْبَ ٱللَّهِ هُمُ ٱلْغَٰلِبُونَ ﴿٥٦﴾

(५६) तथा जो व्यक्ति अल्लाह (तआला) सित तथा त्यसका रसूल एवं मुसलमानहरूसित मित्रता गर्दछ, त्यसले विश्वास गर्नुपर्दछ कि अल्लाह (तआला) का भक्त नै प्रभावशाली हुनेछन् ।[3]

---

[1]यो ईमानवालाहरूको चौथो गुण हो। अर्थात् अल्लाह तआलाका आदेशहरूको पालनामा कुनै व्यक्तिद्वारा अपमानित गर्नुको चिन्ता नगर्नु। यो पनि ठूलो विशेष गुण हो। समाजमा जुन नराम्रा कुराको प्रचलन जनसमूहमा सामान्य हुन आउँछ तिनका विरूद्ध पुण्यमा स्थिरता एवं अल्लाह तआलाका आदेशहरूका पालना यस गुणको बिना सम्भव छैन। नत्र कति यस्ता मानिसहरू छन् जो नराम्रो कुरा, अल्लाहको अवज्ञाकारिता तथा समाजमा उत्पन्न नराम्रो कुरोबाट आफूलाई बचाउन चाहन्छन्, तर राम्रो-नराम्रो भन्नेहरूको भयले उनीसित मुक़ाबिला गर्ने साहस गर्न सक्दैनन् तथा सत्य तथा असत्यबाट बाँच्ने शक्तिबाट बञ्चित नै रहन्छन्। यसैले अल्लाह तआलाले भन्नुभयो कि जसलाई यो गुण प्राप्त हुन्छ, उनीमाथि अल्लाह तआलाको विशेष कृपा छ।

[2]जब यहूदी तथा ईसाईहरूको मित्रताबाट मनाही गरियो, त अब यसको उत्तर दिइँदैछ कि उनी मित्रता कोसित गरून् ? अल्लाहले भन्यो कि ईमानवालाहरूको सर्वप्रथम मित्र अल्लाह तआला स्वयं छ तथा त्यसका रसूल छन् तथा त्यसका अनुयायी ईमानवाला छन्। अगाडि तिनका केही गुण भनिएका छन्।

[3]यो अल्लाह तआलाको पार्टीको लक्षण हो तथा त्यसको विजयको सूचना दिइराखिएको छ। अल्लाह तआलाका भक्तहरूको गुट त्यही हो जो मात्र अल्लाह तथा त्यसका रसूल तथा ईमानवालाहरूसित सम्बन्ध राख्दछन् तथा काफ़िर, मूर्तिपूजक, यहूदीहरू तथा ईसाईहरूसित मित्रता एवं पक्षपातको सम्बन्ध नराखून् चाहे उनी उनका साखे सम्बन्धित किन नहोउन्। जस्तो कि सूर:मुजादिल: को अन्तमा

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ لَا تَتَّخِذُوا۟ ٱلَّذِينَ ٱتَّخَذُوا۟ دِينَكُمْ هُزُوًا وَلَعِبًا مِّنَ ٱلَّذِينَ أُوتُوا۟ ٱلْكِتَٰبَ مِن قَبْلِكُمْ وَٱلْكُفَّارَ أَوْلِيَآءَ ۚ وَٱتَّقُوا۟ ٱللَّهَ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٥٧﴾

(५७) मुसलमानहरू ! तिमी त्यसता मानिसहरूलाई मित्र नबनाऊ, जसले धर्मलाई उपहासको कुरा बनाएका छन् (चाहे) तिनीहरू ती मध्ये होऊन् जो तिमीभन्दा पूर्व किताब प्रदान गरिए अथवा काफ़िर होऊन् ।[1] यदि तिमी निष्ठावान हौ भने अल्लाहसित तर्सिराख ।

وَإِذَا نَادَيْتُمْ إِلَى ٱلصَّلَوٰةِ ٱتَّخَذُوهَا هُزُوًا وَلَعِبًا ۚ ذَٰلِكَ بِأَنَّهُمْ قَوْمٌ لَّا يَعْقِلُونَ ﴿٥٨﴾

(५८) जब तिमी नमाज़को लागि पुकार्दछौं, त उनीहरू त्यसलाई हाँसो-ख्याल भन्ठान्छन् ।[2] यो यसकारण हो कि उनीहरू बुद्धिहीन हुन् ।

---

भनिएको छ, "तिमी अल्लाह तथा अन्त्त दिवसमा ईमान राख्नेवालालाई यस्ता पाउने छैनौं कि उनीहरू यस्ता मानिसहरूसित प्रेम राखून् जो अल्लाह तथा त्यसका रसूलका शत्रु हुन्, चाहे उनी उनका पिता हुन् तथा पुत्र हुन् र उनका भाई हुन् अथवा उनका परिवार तथा जातिका मानिसहरू हुन् ।" तसर्थ शुभ-सूचना दिइयो कि, "यिनी ती मानिसहरू हुन्, जसका हृदयमा ईमान छ, तथा जसलाई अल्लाहको सहायता प्राप्त छ, उनैलाई अल्लाह तआला स्वर्गमा प्रवेश गराउनेछ तथा, यी अल्लाहका भक्तहरूको गुट हो, सफलता जसको सौभाग्य हो ।"(सूर: मुजादिल: अन्तिम आयत)

[1]अहले किताबबाट यहूदी तथा ईसाई एवं काफ़िरहरूबाट मूर्तिपूजकहरूको अर्थ छ। यहाँ पुन: यही जोड दिइएको छ कि धर्मलाई खेल तथा उपहास बनाउनेवाला अल्लाह तथा त्यसका रसूलका शत्रु हुन्, यसकारण उनीहरूसँग ईमानवालाहरूको मित्रता हुनु हुँदैन ।

[2]हदीसमा वर्णित छ कि जब शैतान अज़ानको आवाज सुन्दछ तब पाद्दै (आफ्नो वायु त्याग्दै) भाग्दछ, जब अजान समाप्त हुन्छ तब फेरि फर्केर आउँछ, तकबीर (नमाज़को लागि उभिने समयको इक़ामत) को समय पुन: पिठ्यूँ फर्काइ सुइकुच्चा ठोक्छ, जब तक्बीर समाप्त हुन्छ तब फेरि आएर नमाजीहरूका हृदयमा शंकाहरू उत्पन्न गर्दछ। (अल-हदीस-सहीह बुखारी किताबल अज़ान र सहीह मुस्लिम किताबुस्सलात) शैतानको जस्तै शैतानका अनुयायीहरूलाई पनि अज़ानको स्वर राम्रो लाग्दैन, यसकारण यिनीहरू यसको उपहास गर्दछन् । यस आयतबाट यो पनि ज्ञान भयो कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको हदीस पनि कुरआनको जस्तै धर्मको स्रोत हो तथा त्यसैप्रकार प्रमाण हो किनभने कुरआनले नमाज़को लागि "निदा" (आमन्त्रण, घोषणा आदि) को वर्णन त गरेको छ । परन्तु यो "निदा" (घोषणा) कुन प्रकारले गरियोस् ? यसका शब्द के हुनेछन् ? यो कुरआन करीममा छैन। यी कुराहरू हदीसबाट प्रमाणित छन्, जुन यसको प्रमाण तथा धर्मका स्रोत हुने कुराका प्रमाण हुन् ।

قُلْ يَٰٓأَهْلَ ٱلْكِتَٰبِ هَلْ تَنقِمُونَ مِنَّآ إِلَّآ أَنْ ءَامَنَّا بِٱللَّهِ وَمَآ أُنزِلَ إِلَيْنَا وَمَآ أُنزِلَ مِن قَبْلُ وَأَنَّ أَكْثَرَكُمْ فَٰسِقُونَ ﴿٥٩﴾

(५९) तपाईं भनिदिनुस्, हे यहूदी तथा ईसाईहरू ! तिमी हामीसित केवल यसकारण शत्रुता गर्दछौ कि हामी अल्लाह (तआला) मा र जे-जति हामीतिर अवतरित गरिएको छ तथा जे-जति यसभन्दा पूर्व अवतरित भएको छ त्यसमा ईमान राख्दछौं, र यसकारण पनि कि तिमीहरूमा अधिकतर दुराचारी छन् ।

قُلْ هَلْ أُنَبِّئُكُم بِشَرٍّ مِّن ذَٰلِكَ مَثُوبَةً عِندَ ٱللَّهِ ۚ مَن لَّعَنَهُ ٱللَّهُ وَغَضِبَ عَلَيْهِ وَجَعَلَ مِنْهُمُ ٱلْقِرَدَةَ وَٱلْخَنَازِيرَ وَعَبَدَ ٱلطَّٰغُوتَ ۚ أُو۟لَٰٓئِكَ شَرٌّ مَّكَانًا وَأَضَلُّ عَن سَوَآءِ ٱلسَّبِيلِ ﴿٦٠﴾

(६०) भनिदिनुस् कि के म तिमीलाई भनुँ कि यसभन्दा पनि अधिक नराम्रो प्रतिफल पाउनेहरु अल्लाह तआला निकट को हुन् ? ती जसमाथि अल्लाह तआलाले धिक्कार गरेको छ एवं उनीहरुमध्ये केहीलाई बाँदर तथा सुङ्गुर बनाइदियो तथा जसले झुटा देवताहरुको पूजा गरे यिनै नराम्रो श्रेणी भएका हुन् तथा यिनै सत्यमार्गभन्दा धेरै अधिक विचलित छन् ।

हुज्जते हदीस (हदीसमा प्रमाण हुनुको अर्थ) यो हो कि जुनप्रकार कुर्आनका मन्त्रहरूबाट प्रमाणित आदेश तथा कर्तव्यहरूको पालन अनिवार्य छ तथा तिनको इन्कार नास्तिकता हो, यसैप्रकार ईशदूत मुहम्मद (रसूल) का कथनहरूबाट प्रमाणित आदेश तथा कर्तव्यहरूको पालन पनि आवश्यक छ, तैपनि रसूलको हदीसको निरन्तर सिद्ध हुनु आवश्यक छ, सहीह हदीस अनेक कथाकारहरूद्वारा होस् अथवा एकबाट त्यो कथित होस्, क्रमिक होस् अथवा प्रमाणित सबै कर्म योग्य छन् । हदीस सहीहलाई एकको सूचना हुनुको कारण अथवा कथाकारको निर्बोध हुनुको दाबी गरेर अथवा बुद्धिमा न आउनको बहाना गरेर अथवा यसै प्रकारका अन्य कारणहरूले अस्वीकार गर्नु सही छैन । यी सब हदीसहरूको इन्कारका विभिन्न रूप हुन्, जुन अनेक सम्प्रदायहरूले यसलाई नकार्न तथा अस्वीकार गर्नका लागि अपनाएका छन् ।

[1]अर्थात् तिमी त (हे अहले किताब !) शास्त्रधारीहरू हामीसित अकारण खिन्न होउ जबकि यसबाहेक हाम्रो कुनै दोष छैन कि हामी अल्लाह तथा पवित्र कुरआनमा विश्वास गर्दछौं तथा यसभन्दा पूर्व जुन धर्मशास्त्र उतारिए । के त्यो पनि कुनै दोष अथवा कलङ्क हो अर्थात् यो कलङ्क तथा निन्दाको विषय होइन जस्तो कि तिमीले बुझिहालेका छौ । हामी तिमीलाई भन्दछौं कि नराम्रो कुराका योग्य तथा कुपथ जो घृणा तथा निन्दाका पात्र हुन्, को हुन् ? ती मानिसहरू हुन् जसमाथि अल्लाहको धिक्कार

وَإِذَا جَآءُوكُمْ قَالُوٓا ءَامَنَّا وَقَد دَّخَلُوا بِالْكُفْرِ وَهُمْ قَدْ خَرَجُوا بِهِۦ ۚ وَاللَّهُ أَعْلَمُ بِمَا كَانُوا يَكْتُمُونَ ﴿٦١﴾

(६१) तथा जब उनी तपाईंको पासमा आउँछन् कि हामीले ईमान स्वीकार गऱ्यौं, यद्यपि उनीहरू कुफ्रका लागि आएका थिए तथा त्यसै कुफ्रका साथ गए पनि एवं यिनीहरू जे-जति लुकाइराखेका छन्, त्यसलाई अल्लाह तआला राम्ररी जान्दछ ।[1]

وَتَرَىٰ كَثِيرًا مِّنْهُمْ يُسَارِعُونَ فِي الْإِثْمِ وَالْعُدْوَانِ وَأَكْلِهِمُ السُّحْتَ ۚ لَبِئْسَ مَا كَانُوا يَعْمَلُونَ ﴿٦٢﴾

(६२) तथा तपाईंले देख्नुहुनेछ कि यिनीमध्येबाट अधिकतर पापका कार्यहरूतिर,अत्याचार तथा क्रुरतातिर एवं हराम माल खानुतिर लम्किरहेछन्, जे-जति यिनीहरू गरिराखेका छन्, ती अत्याधिक नराम्रा कर्म हुन् ।

لَوْلَا يَنْهَىٰهُمُ الرَّبَّٰنِيُّونَ وَالْأَحْبَارُ عَن قَوْلِهِمُ الْإِثْمَ وَأَكْلِهِمُ السُّحْتَ ۚ لَبِئْسَ مَا كَانُوا يَصْنَعُونَ ﴿٦٣﴾

(६३) तिनीहरूलाई तिनका पूजारी तथा ज्ञानी तिनलाई झूठो कुरा बोल्न तथा अवैध खानेकुरोबाट किन रोक्दैनन् ? निःसन्देह यी नराम्रा कर्म हुन्, जुन यिनीहरू गरिराखेका छन् ।[2]

तथा रोष प्रकट भयो र केहीलाई अल्लाहले बाँदर र सुँगुर बनाइदियो तथा जसले राक्षसको पूजा गरे, तथा यस दर्पणमा तिमी पनि आफ्नो मुख तथा कर्म हेरिहाल कि यो कसको इतिहास हो तथा कुन मानिसहरू हुन्, के यो तिमी नै त होइनौं ।

[1]यो द्वयवादी (मुनाफ़िक़हरू) को वर्णन हो जो नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा अविश्वासका साथ आउँछन् तथा त्यसैको साथ फर्केर जान्छन् । तपाईं सल्लल्लाहु अलैहि वसल्लमको संगत तथा शिक्षा-दीक्षाको कुनै प्रभाव उनीमाथि कदाचित हुँदैन किनभने हृदयमा त ईर्ष्या लुकेको हुन्छ । तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थितिको उद्देश्य मार्गदर्शन प्राप्त गर्नु होइन बरू धोखा, छल, कपट गर्नु हो । अनि यस उपस्थितिको लाभ के हुनसक्छ ?

[2]यो ज्ञानीहरू, धर्मगुरुहरू एवं साधु सन्तहरूको निन्दा हो कि साधारण मानिसहरू मध्येबाट अधिकांश तिम्रो समक्ष एवं अवज्ञा एवं कुकर्म गर्दछन् तर तिमी उनीहरूलाई रोक्दैनौं यस्तो दशामा तिम्रो मौन घोर अपराध हो, यसबाट विदित हुन्छ कि सत्कर्महरूको प्रचार तथा दुष्कर्महरूबाट रोक्नुको कति महत्व छ र यसलाई त्याग दिनुमा कति कडा धम्की छ, जस्तो कि अहादीस (रसूलका कथनहरू) मा यस विषयलाई सविस्तार एवं स्पष्टरूपले वर्णन गरिएको छ ।

وَقَالَتِ الْيَهُودُ يَدُ اللَّهِ مَغْلُولَةٌ ۚ غُلَّتْ أَيْدِيهِمْ وَلُعِنُوا بِمَا قَالُوا ۘ بَلْ يَدَاهُ مَبْسُوطَتَانِ يُنفِقُ كَيْفَ يَشَاءُ ۚ وَلَيَزِيدَنَّ كَثِيرًا مِّنْهُم مَّا أُنزِلَ إِلَيْكَ مِن رَّبِّكَ طُغْيَانًا وَكُفْرًا ۚ

(६४) तथा यहूदीहरूले भने कि अल्लाह (तआ़ला) को हात बाँधिएका छन्।[1] तिनैका हात बाँधिएका छन् तथा तिनका कथनको कारण उनीमाथि धिक्कार गरियो। अपितु अल्लाह तआ़लाका दुबै हात खुलेका छन् जुन प्रकार चाहन्छ

[1]यो त्यही कुरा हो जुन सूरः आले इमरानको आयत संख्या १८१ मा गरिएको छ कि जब अल्लाह तआ़लाले आफ्नो मार्गमा व्यय गर्नुको प्रेरणा दियो तथा त्यसले अल्लाहलाई राम्रो ऋण दिनुको समान भनियो त यी यहूदीहरूले भने कि "अल्लाह तआ़ला त भिखारी छ।" मानिसहरूबाट ऋण माँगिराखेको छ तथा उनी त्यस उत्तम भाष्य शैलीलाई बुझ्न सकेनन् जुन त्यसभित्र निहीत थियो। अर्थात् सबै कुरो अल्लाहबाट दिइएको छ। तथा अल्लाहबाट दिएको मालमध्येबाट केही त्यसको मार्गमा व्यय गरिदिनु, कुनै ऋण होइन, परन्तु यो उसको अति कृपा हो कि त्यो त्यसमा पनि अत्याधिक प्रतिफल प्रदान गरिराखेको छ, यहाँसम्मकि एक-एक दानालाई सात-सात सय दानासम्म बढाइदिन्छ। तथा त्यसलाई राम्रो ऋण यसलाई भनिएको छ कि जति तिमी व्यय गर्नेछौ, अल्लाह तआ़ला त्यसबाट कैयन् गुना तिमीलाई वापस फर्काइदिनेछ। (مغلولة) को अर्थ (بخيلة) गरिएको छ, जसको अर्थ हो कृपण। अर्थात् यहूदीहरूको तात्पर्य यो थिएन कि वास्तवमा अल्लाहका हात बाँधिएका छन्, बरू उनीहरूको अर्थ यो थियो कि त्यसले आफ्नो हात व्यय गर्नुबाट रोकेको छ। (इब्ने कसीर) अल्लाह तआ़लाले भन्नुभयो कि हात त तिनैका बाँधिएका छन्। अर्थात् कंजूसी त उनीहरूकै आचरण हो। अल्लाह तआ़लाका त दुबै हात खुलेका छन्। त्यो जुन प्रकार चाहन्छ व्यय गर्दछ। त्यो अत्याधिक कृपालु तथा अत्याधिक प्रदान गर्नेवाला छ, सबै कोष उसैका पासमा छन्। यसको अतिरिक्त आफ्नो सृष्टिका सबै इच्छा तथा आवश्यकताहरूको प्रबन्ध गरेको छ। हामीलाई रात अथवा दिनमा, यात्रा अथवा निवासमा तथा अन्य अवस्थाहरूमा जुन-जुन कुराको आवश्यकता हुन्छ अथवा हुनसक्छ, सबै त्यही नै उपलब्ध गराउँछ।

﴿وَآتَاكُم مِّن كُلِّ مَا سَأَلْتُمُوهُ ۚ وَإِن تَعُدُّوا نِعْمَتَ اللَّهِ لَا تُحْصُوهَا ۗ إِنَّ الْإِنسَانَ لَظَلُومٌ كَفَّارٌ﴾

"तिमीले जे-जति उसित माग्यौ, त्यो उसले तिमीलाई दियो, अल्लाह तआ़लाको अनुग्रह यति छ कि तिमी गन्न सक्दैनौ, मनुष्य नै मुर्ख छ तथा अत्याधिक कृतघ्न छ।" (सूरः इब्राहीम-३४)

हदीसमा पनि छ, नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो: अल्लाहको दाहिने हात भरिएको छ, रात-दिन व्यय गर्दछ, परन्तु कुनै कमी आउँदैन, अलि हेर जबदेखि आकाश तथा धर्ती उसले बनाएको छ, त्यो व्यय गरिराखेको छ तर उसको हातको कोषमा कमी आएन....... (अल-बुख़ारी किताबुल तौहीद, बाब व काना अर्शुहु अलल माए र मुस्लिम किताबुज़्ज़कात, बाबुल हस्से अलन्नफक़:)

وَأَلْقَيْنَا بَيْنَهُمُ الْعَدَاوَةَ وَالْبَغْضَاءَ إِلَىٰ يَوْمِ الْقِيَامَةِ ۚ كُلَّمَا أَوْقَدُوا نَارًا لِّلْحَرْبِ أَطْفَأَهَا اللَّهُ ۚ وَيَسْعَوْنَ فِي الْأَرْضِ فَسَادًا ۚ وَاللَّهُ لَا يُحِبُّ الْمُفْسِدِينَ ﴿٦٤﴾

व्यय गर्दछ तथा जे-जति तिमीतिर तिम्रो प्रभुको तर्फबाट अवतरित गरिएको छ, त्यो तिनीमध्येबाट अधिकतरलाई अवहेलना तथा कुफ्रमा बढाइदिन्छ, तथा हामीले उनीहरूमा आपसमा नै कयामत सम्मको लागि द्वेष तथा ईर्ष्या पारिदिएका छौं, उनीहरू जुनबेला युद्धको आगोलाई भड्काउन चाहन्छन्, अल्लाह तआला त्यसलाई निभाइदिन्छ ।[1] यिनी देशभरमा आतङ्क तथा उपद्रव मच्चाउँदै हिंड्छन् ।[2] तथा अल्लाह तआला उपद्रविहरूसित प्रेम गर्दैन ।

وَلَوْ أَنَّ أَهْلَ الْكِتَابِ آمَنُوا وَاتَّقَوْا لَكَفَّرْنَا عَنْهُمْ سَيِّئَاتِهِمْ وَلَأَدْخَلْنَاهُمْ جَنَّاتِ النَّعِيمِ ﴿٦٥﴾

(६५) तथा यदि यी अहले किताब ईमान ल्याउने भए तथा अल्लाहसित तर्सने भए ।[3] त हामी उनीहरूका सबै नराम्रो कुराहरू मेटाइदिन्थ्यौं तथा उनीहरूलाई अवश्य सुखद स्वर्गमा लैजान्थ्यौं ।

وَلَوْ أَنَّهُمْ أَقَامُوا التَّوْرَاةَ وَالْإِنجِيلَ وَمَا أُنزِلَ إِلَيْهِم مِّن رَّبِّهِمْ لَأَكَلُوا مِن فَوْقِهِمْ وَمِن

(६६) यदि उनीहरू तौरात तथा इंजील तथा ती धर्मशास्त्रहरूको स्थापना गरेको भए जुन उनीहरूतिर पालनकर्ताको तर्फबाट अवतरित गरिएको छ ।[4]

[1]अर्थात् यिनीहरू जहिलेपनि तपाईं विरूद्ध कुनै षडयन्त्र गर्दछन् अथवा लडाईको कारण उत्पन्न गर्दछन्, त अल्लाह तआलाले उनलाई निष्काम गरिदिन्छ तथा उनको षडयन्त्रलाई उनैमाथि फर्काइदिन्छ । उनको जुत्ता उनैको टाउको भन्ने कुरो पैदा गरिदिन्छ ।

[2]उनको दोस्रो आचरण यो छ कि धर्तीमा उपद्रव फैलाउन भरसक प्रयत्न गर्दछन् । वास्तविकता यो हो कि अल्लाह तआला उपद्रविहरूलाई प्रिय बनाउँदैन ।

[3]अर्थात् उनी ईमान जसको माग अल्लाह तआला गर्दछ ती मध्ये सबैभन्दा विशेष मोहम्मदुर्ररसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा ईमान ल्याउनु हो, जस्तो कि उनीमाथि अवतरित गरिएका किताबहरूमा पनि उनलाई यसको आदेश दिइएको छ । तथा अल्लाहसित तर्स तथा अल्लाहको क्रोधबाट बच, जसमा सबभन्दा विशेष शिर्क छ, जसमा उनीहरू लीन छन् तथा त्यो इन्कार छ जुन अन्तिम रसूलसँग उनीहरू गरिराखेका छन् ।

[4]तौरात तथा इंजीलको पालन गर्नुको अर्थ उनीहरूका ती आदेशहरूको पालन हो जुन तिनीहरूमध्ये उनलाई दिएका छन् तथा उनीहरूमध्ये एउटा आदेश अन्तिम नबी सल्लल्लाहु अलैहि वसल्लममा ईमान ल्याउनु पनि थियो ।

تَحْتِ أَرْجُلِهِمْ ۚ مِّنْهُمْ أُمَّةٌ مُّقْتَصِدَةٌ ۖ وَكَثِيرٌ مِّنْهُمْ سَاءَ مَا يَعْمَلُونَ ﴿٦٦﴾

त आफ्नो माथि तथा आफ्नो खुट्टामुनिबाट खान पाउँथे ।[1] उनीहरूमध्ये एक गिरोह (समूह) सन्तुलित छ तथा अधिकांश दुराचार गरिराखेका छन् ।[2]

يَا أَيُّهَا الرَّسُولُ بَلِّغْ مَا أُنزِلَ إِلَيْكَ مِن رَّبِّكَ ۖ وَإِن لَّمْ تَفْعَلْ فَمَا بَلَّغْتَ رِسَالَتَهُ ۚ وَاللَّهُ يَعْصِمُكَ مِنَ النَّاسِ ۗ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الْكَافِرِينَ ﴿٦٧﴾

(६७) हे रसूल ! (सन्देशवाहक) तपाईंतिर तपाईंको पोषकको पासबाट जुन (सन्देश) उतारिएको छ, त्यसलाई पुऱ्याइदिनुस्, यदि तपाईंले यो गर्नु भएन भने आफ्नो पालनकर्ताको सन्देश पुऱ्याउनु भएन ।[3] र अल्लाह मानिसहरू (को नराम्रो कुरो) बाट तपाईंका

(ما أنزل) को अर्थ सबै आकाशीय किताबहरू हुन्, जसको कुर्आन करीम पनि सम्मिलित छ । तात्पर्य यो हो कि यिनीहरू इस्लाम धर्म स्वीकार गरिहालून् ।

[1]माथि-तलको अर्थ प्रचुरताको रूपमा लिएको छ अथवा माथिबाटको अर्थ आवश्यकता अनुसार आकाशसित तथा तलबाटको अर्थ धर्तीबाट छ जसको परिणाम खाद्य पदार्थको अधिकता हो । जुनप्रकारले एक अन्य ठाउँमा आदेश छः

﴿وَلَوْ أَنَّ أَهْلَ الْقُرَىٰ آمَنُوا وَاتَّقَوْا لَفَتَحْنَا عَلَيْهِم بَرَكَاتٍ مِّنَ السَّمَاءِ وَالْأَرْضِ﴾

"यदि वस्तीवालाले ईमान ल्याएको भए र उनीहरूले अल्लाहको भय राखेको भए हामी उनीमाथि आकाश तथा धर्तीका विभूतिहरूको (द्वार) खोलिदिन्थ्यौं ।" (सूरः अल-आराफ़-९६)

[2]परन्तु उनीहरूको बहुमतले ईमानको यो मार्ग अपनाएनन् तथा उनीहरू आफ्ना कुफ्रमा अडिग रहे एवं महम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालत (दूतत्व) को इन्कारमा दृढ रहे । यसै मार्ग तथा इन्कारलाई यहाँ दुराचार भनिएको छ । मध्यम नीति अपनाउनेवाला एक गुटबाट तात्पर्य यहाँ अब्दुल्लाह बिन सलाम जस्ता आठ अथवा नौ अन्य व्यक्तिहरू हुन्, जो मदीनाका यहूदीहरू मध्येबाट मुसलमान भए ।

[3]यस आदेशको यो लाभ हो कि जे पनि तपाईं सल्लल्लाहु अलैहि वसल्लममाथि अवतरित गरिएको छ त्यसलाई बिना कुनै भय तथा विलम्ब तपाईं मानिसहरूसम्म पुऱ्याइदिनुस् । अतः उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यस्तै गर्नुभयो । आदरणीय आयशा (رضى الله عنها) भन्नुहुन्छ कि, "जुन व्यक्तिले यो शंका गऱ्यो कि नबी सल्लल्लाहु अलैहि वसल्लमले केही लुकाउनु भयो, त्यसले अवश्य झूठो भन्यो ।" (सहीह बुख़ारी-४८५५) तथा आदरणीय अली (رضى الله عنه) सित पनि सोधियो कि तिम्रो पासमा कुर्आनको अतिरिक्त प्रकाशना (वह्यी) द्वारा अवतरित गरिएको कुनै कुरो छ ? त उनले कसम खाएर नकारात्मक उत्तर दिए तथा भने (إِلَّا فَهْمًا يُعْطِيهِ اللَّهُ رَجُلًا) (अपितु कुर्आनको समक्ष हो, जसलाई चाहन्छ अल्लाह तआला प्रदान गर्दछ) (सहीह बुख़ारी ६९०३) हज्जतुल विदाआको अवसरमा उहा सल्लल्लाहु अलैहि वसल्लमले

रक्षा गर्नेछ ।[1] निःसन्देह अल्लाह विश्वासहीनहरूलाई मार्गदर्शन दिंदैन ।

قُلْ يَٰٓأَهْلَ ٱلْكِتَٰبِ لَسْتُمْ عَلَىٰ شَىْءٍ حَتَّىٰ تُقِيمُوا۟ ٱلتَّوْرَىٰةَ وَٱلْإِنجِيلَ وَمَآ أُنزِلَ إِلَيْكُم مِّن رَّبِّكُمْ ۗ وَلَيَزِيدَنَّ كَثِيرًا مِّنْهُم مَّآ أُنزِلَ إِلَيْكَ مِن رَّبِّكَ طُغْيَٰنًا وَكُفْرًا ۖ

(६८) तपाईं भनिदिनुस् कि हे अहले किताव ! तिम्रो कुनै आधार छैन जवसम्मकि तौरात तथा इंजील एवं जे पनि (धर्मशास्त्र) तिम्रो पालनकर्ताको तर्फबाट तिम्रो पासमा अवतरित गरिएको छ, त्यसको स्थापना (पालन) गर्दैनौ तथा जुन तपाईंतिर (पवित्र कुरआन) तपाईंको पोषकको तर्फवाट

एकलाख अथवा एक लाख चालीस हजारको जनसमूहको समक्ष सोध्नुभयो, "तिमी मेरो विषयमा के भन्नेछौ ?" उनीहरूले उत्तर दिए ।

(نَشْهَدُ أَنَّكَ قَدْ بَلَّغْتَ، وَأَدَّيْتَ، وَنَصَحْتَ)

"हामी साक्षी हुनेछौं कि तपाईंले अल्लाह तआलाको सन्देश पुऱ्याइदिनु भयो तथा दायित्व निर्वाह गर्नुभयो एवं भलाई गर्नुभयो ।"

"उहाँ सल्लल्लाहु अलैहि वसल्लमले आकाशतिर औंला उचाली संकेत गर्दै भन्नुभयो (तीन पटक) (اللهم هل بلغت) अथवा (اللهم فاشهد) (तीन पटक) (सहीह मुस्लिम किताबुल हज्ज वाव हज्जतुन नवी सल्लल्लाहु अलैहि वसल्लम) अर्थात् हे अल्लाह ! मैले तिम्रो सन्देश पुऱ्याइदिएँ । तिमी साक्षी रह, तिमी साक्षी रह, तिमी साक्षी रह ।"

[1]यो रक्षा अल्लाह तआलाले चमत्कारिक रूपले पनि गऱ्यो तथा सांसारिक साधनहरूवाट पनि । सांसारिक साधनहरूमा यस आयतको अवतरण हुनुभन्दा धेरै पूर्व अल्लाह तआलाले सर्वप्रथम उहाँका काका अवू-तालिवको हृदयमा उहाँको स्वभाविक प्रेम बसाल्यो तथा उनले सल्लल्लाहु अलैहि वसल्लमको रक्षा गर्दैरहे । उनको कुफ्रमा वनिरहनु पनि यी कारणहरूको एक भाग प्रतीत हुन्छ । किनभने यदि उनी मुसलमान भइहालेको भए त शायद कुरैशका सरदारहरूको हृदयमा रहँदैनथ्यो, जुन कि उनको धर्मको अनुयायी हुनुको कारण उनको अन्तिम समयसम्म वनिरह्यो । अनि उनको देहान्त उपरान्त केही अन्य कुरैशी सरदारहरूद्वारा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको रक्षा गऱ्यो, त्यसको पश्चात मदीनाका अन्सारहरूद्वारा उहाँको रक्षा गऱ्यो । अनि जव यो आयत अवतरित भयो त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सुरक्षाका प्रत्यक्ष प्रवन्धहरूलाई हटाइदिनुभयो, त्यसको पश्चात अनेक ठूला खतरा आए परन्तु अल्लाह तआलाले रक्षा गरे, त्यसको पश्चात मदीनाका अन्सारहरूद्वारा उहाँको रक्षा गऱ्यो । अनि जव यो आयत अवतरित भयो त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सुरक्षाका प्रत्यक्ष प्रवन्धहरूलाई हटाइदिनुभयो । त्यसको पश्चात अनेक ठूला खतरा आए परन्तु अल्लाह तआलाले रक्षा गरे । अतः वहयी (प्रकाशना) द्वारा अल्लाह तआलाले समय-समयमा यहूदीहरूको छल-षडयन्त्रबाट सूचित गरेर एक भयानक खतराको घटनावाट वचाइहाल्यो तथा घमासान युद्धको समय काफिरहरूका खतरनाक आक्रमणहरूवाट पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई सुरक्षित राख्यो ।

فَلَا تَأْسَ عَلَى الْقَوْمِ الْكٰفِرِيْنَ ﴿٦٨﴾

उतारिएको छ, त्यसले यिनीहरूमध्ये अधिकतरको हठ तथा कुफ्रलाई बढाउने छ ।[1] अत: तपाईं अविश्वासीहरूमाथि खेद नगर्नुस् ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَالَّذِيْنَ هَادُوْا وَالصّٰبِـُٔوْنَ وَالنَّصٰرٰى مَنْ اٰمَنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ وَعَمِلَ صَالِحًا فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿٦٩﴾

(६९) मुसलमान, यहूदी, ताराका पूजारीहरू एवं ईसाईहरू मध्येबाट जो पनि अल्लाह तथा अन्त दिवस (प्रलय) प्रति विश्वास गर्नेछ तथा सदाचार गर्नेछ त यस्तालाई न कुनै भय छ न उनीहरू शोक गर्नेछन् ।[2]

لَقَدْ اَخَذْنَا مِيْثَاقَ بَنِيْٓ اِسْرَآءِيْلَ وَاَرْسَلْنَآ اِلَيْهِمْ رُسُلًا ۭ كُلَّمَا جَاۗءَهُمْ رَسُوْلٌۢ بِمَا لَا تَهْوٰٓى اَنْفُسُهُمْ ۙ فَرِيْقًا كَذَّبُوْا

(७०) हामीले इस्राईलका पुत्रहरू (यहूदीहरू) बाट वचन लियौं तथा उनको पासमा रसूलहरूलाई पठायौं । जब कुनै रसूल उनको पासमा यस्तो आदेश ल्यायो जुन उनको मनले स्वीकार गर्दैनथ्यो त उनीहरूले

---

[1]यो मार्गदर्शन तथा पथ-विचलन त्यस नियमानुसार छ, जुन अल्लाह तआलाको विधि हो । अर्थात् जसरी केही कर्महरू तथा कुराको कारणले ईमान, सत्कर्म तथा लाभकारी ज्ञानमा वृद्धि हुन्छ, त्यसै प्रकार इन्कार तथा अवज्ञाको कारण कुफ्रमा पनि वृद्धि हुन्छ । यस विषयको चर्चा अल्लाह तआलाले कुरआनमा विभिन्न स्थानहरूमा गरेको छ । जस्तै:

﴿قُلْ هُوَ لِلَّذِينَ آمَنُوا هُدًى وَشِفَاءٌ ۖ وَالَّذِينَ لَا يُؤْمِنُونَ فِي آذَانِهِمْ وَقْرٌ وَهُوَ عَلَيْهِمْ عَمًى ۚ أُولَٰئِكَ يُنَادَوْنَ مِنْ مَكَانٍ بَعِيدٍ﴾

"भनिदिनुस् ! यो कुरआन ईमानवालाहरूको लागि मार्गदर्शन तथा रोग निवारक छ तथा जो ईमान ल्याउँदैनन् उनीहरूका कान बहिरा छन् र यो उनको पक्षमा अन्धोपन हो । बहिरापनाको कारण उनलाई जस्तै टाढा स्थानबाट आवाज दिइन्छ ।" (सूर: हा.मीम.अल-सजद:-४४)

﴿وَنُنَزِّلُ مِنَ الْقُرْآنِ مَا هُوَ شِفَاءٌ وَرَحْمَةٌ لِلْمُؤْمِنِينَ ۙ وَلَا يَزِيدُ الظَّالِمِينَ إِلَّا خَسَارًا﴾

"र हामी कुरआनद्वारा ती कुरा अवतरित गर्दछौं, जुन ईमानवालाहरूको लागि स्वस्थ्य तथा कृपा हो तथा अत्याचारीलाई त यसबाट हानि नै हुन्छ ।" (सूर: बनी इस्राईल-८२)

[2]यो त्यही विषय हो जुन सूर: अल-बकर:को आयत संख्या ६२ मा वर्णित भइसकेको छ, त्यसलाई हेरिहाल्नुस् ।

وَفَرِيقًا يَقْتُلُونَ ۞

एक गुटलाई झुठ्लाए तथा एक गुटको हत्या गर्दैरहे ।

وَحَسِبُوٓا أَلَّا تَكُونَ فِتْنَةٌ فَعَمُوا وَصَمُّوا ثُمَّ تَابَ اللَّهُ عَلَيْهِمْ ثُمَّ عَمُوا وَصَمُّوا كَثِيرٌ مِّنْهُمْ ۚ وَاللَّهُ بَصِيرٌۢ بِمَا يَعْمَلُونَ ۞

(७१) तथा भन्ठाने कि कुनै दण्ड हुनेछैन, यसकारण अन्धा-बहिरा भइरहे। अनि अल्लाह (तआ़ला) ले उनलाई क्षमा गरिदियो, त्यसको उपरान्त पनि तिनीहरू मध्येबाट अधिकतर अन्धा-बहिरा भइहाले।[1] र अल्लाह (तआ़ला) तिनका कर्महरूलाई राम्ररी देख्नेवाला छ ।

لَقَدْ كَفَرَ الَّذِينَ قَالُوٓا إِنَّ اللَّهَ هُوَ الْمَسِيحُ ابْنُ مَرْيَمَ ۖ وَقَالَ الْمَسِيحُ يَٰبَنِىٓ إِسْرَٰٓءِيلَ اعْبُدُوا اللَّهَ رَبِّى وَرَبَّكُمْ ۖ إِنَّهُۥ مَن يُشْرِكْ بِاللَّهِ فَقَدْ حَرَّمَ

(७२) तिनीहरू काफिर भइहाले जसले भने कि मरियमको पुत्र मसीह नै अल्लाह हो[2] जबकि मसीहले (स्वयं) भने कि हे इस्राईलका पुत्रहरू ! मेरो पोषक तथा आफ्नो पोषक अल्लाहको पूजा गर[3] किनभने जसले अल्लाहसँग

[1] अर्थात् भन्ठान्थे कि कुनै दण्ड हुनेछैन। परन्तु अल्लाहद्वारा वर्णित नियमहरूको आधारमा दण्ड निर्धारित भयो कि यिनी सत्यलाई देख्नबाट नेत्रहीन भइहाले तथा सुन्नबाट बहिरा भइहाले तथा क्षमा माँग्नु पश्चात पनि यही कर्म उनीहरूले दोहोऱ्याए, त यसको त्यही दण्ड पुन: पनि दिइयो ।

[2] यही विषय आयत संख्या १७ मा आइसकेको छ। यहाँ अहले किताबको कुपथको चर्चा पुन: गरिँदैछ। यसमा तिनका त्यो गुटको धर्म-भ्रष्टताको वर्णन छ जो आदरणीय मसीहलाई स्वयं अल्लाह हुनुमा विश्वास गर्दछ ।

[3] अर्थात् आदरणीय ईसा अर्थात् मसीह पुत्र मरियमले आमाको काखमा (अल्लाहको आदेशले जबकि बच्चाहरू त्यस अवस्थामा बोल्ने शक्ति राख्दैनन्) सर्वप्रथम आफ्नो मुखले आफूलाई भक्त नै भने तथा भने कि:

﴿إِنِّى عَبْدُ اللَّهِ ءَاتَىٰنِىَ الْكِتَٰبَ وَجَعَلَنِى نَبِيًّا﴾

"म अल्लाहको भक्त हूँ तथा त्यसको रसूल हूँ, मलाई त्यसले किताब पनि प्रदान गरेको छ ।" (सूर: मरियम-३०)

आदरणीय मसीहले यो भनेनन् कि म अल्लाह अथवा अल्लाहको पुत्र हुँ केवल यो भने कि म अल्लाहको दास हूँ। तथा वयस्क अवस्थामा पनि उनले यही आमन्त्रण दिए ।

﴿إِنَّ اللَّهَ رَبِّى وَرَبُّكُمْ فَاعْبُدُوهُ ۚ هَٰذَا صِرَٰطٌ مُّسْتَقِيمٌ﴾

اللهُ عَلَيْهِ الْجَنَّةَ وَمَأْوٰهُ النَّارُ ۖ وَمَا لِلظّٰلِمِيْنَ مِنْ اَنْصَارٍ ﴿٧٢﴾

मिश्रण (शिर्क) गर्नेछ अल्लाहले त्यसको लागि स्वर्ग निषेधित गरिदिएको छ तथा त्यसको ठेगाना नर्क हो एवं अत्याचारीहरू (मिश्रणवादीहरू) को कोही सहायक हुनेछैन ।[1]

لَقَدْ كَفَرَ الَّذِيْنَ قَالُوْٓا اِنَّ اللّٰهَ ثَالِثُ ثَلٰثَةٍ ۘ وَمَا مِنْ اِلٰهٍ اِلَّآ اِلٰهٌ وَّاحِدٌ ۭ وَاِنْ

(७३) तिनीहरू पनि पूर्णरूपले काफ़िर भइहाले जसले भने कि तीनको तेस्रो हो ।[2] वास्तवमा अल्लाह (तआला) को अतिरिक्त कोही

"नि:सन्देह मेरो र तिम्रो प्रभु अल्लाह हो, उसैको उपासना गर, यही सोभ्फो मार्ग हो ।"(सूर: आले इमरान-५१)

यी ती नै शब्द हुन् जुन आमाको काखमा भनेका थिए (हेर्नुस् सूर: मरियम-३६) तथा जब क़ेयामतको निकट उनी आकाशबाट अवतरित हुनेछन्, जसको सूचना सहीह हदीसमा दिइएको छ तथा जसमा अहले सुन्नतको विश्वास छ, तैपनि उनी नबी सल्लल्लाहु अलैहि वसल्लमका शिक्षाहरूको अनुसार मानिसहरूलाई अल्लाहको तौहीद (एकेश्वरवाद) तथा त्यसको भक्तितिर बोलाउने छन्, न कि आफ्नो उपासनातिर ।

[1]आदरणीय मसीहले आफ्नो भक्ति तथा रिसालतको प्रदर्शन त्यस समय पनि गरेका थिए जब उनी आमाको काखमा स्तनपानको आयुमा थिए । पुन: वयस्क अवस्थामा पनि यही घोषणा गरे तथा साथै-साथै शिर्कको पहिचान तथा त्यसबाट बाँच्ने विधि एवं नराम्रा कुराहरू पनि वर्णित गरिदिए कि मूर्तिपूजकको लागि स्वर्ग निषेध छ तथा त्यसको कोही सहायक पनि हुनेछैन, जसले उसलाई नरकबाट निकालेर ल्याओस् जस्तो कि मिश्रणवादीहरूको भ्रम छ ।

[2]यो ईसाईहरूको अर्को गुटको वर्णन हो, जुन तिनको योगलाई ईश्वर मान्दछ तथा त्यसलाई त्रिमूर्ति भन्दछ । यद्यपि यसको व्याख्या तथा वर्णनमा उनीहरूबीच स्वयं मतभेद छ । तर उचित कुरो यो हो कि उनीहरूले आदरणीय ईसा तथा उनकी माता आदरणीय मरियमलाई पनि पूज्य बनाइहालेका छन् । जस्तो कि क़ुरआनले त्यसको विस्तारपूर्वक वर्णन गरेको छ, अल्लाह तआला प्रलयका दिन आदरणीय ईसासित प्रश्न गर्नेछ ।

﴿ءَاَنْتَ قُلْتَ لِلنَّاسِ اتَّخِذُوْنِيْ وَاُمِّيَ اِلٰهَيْنِ مِنْ دُوْنِ اللّٰهِ ۭ﴾

"के तिमीले मानिसहरूसित भनेका थियौ कि मलाई तथा मेरी आमालाई अल्लाहको अतिरिक्त (पूज्य) बनाइहाल्नु ?" (सूर: अल-मायद:-११६)

यसबाट ज्ञान भयो कि ईसा तथा मरियम, यी दुबैलाई ईसाईहरूले पूज्य बनाए तथा अल्लाह तेस्रो पूज्य भयो, जो त्रिमूर्तिमा तेस्रो (तीन मध्येको तेस्रो) कहलाइयो । पहिलो विश्वासको जस्तै अल्लाह तआलाले यसलाई पनि अधर्म भनेको छ ।

لَمۡ يَنۡتَهُوۡا عَمَّا يَقُوۡلُوۡنَ لَيَمَسَّنَّ الَّذِيۡنَ كَفَرُوۡا مِنۡهُمۡ عَذَابٌ اَلِيۡمٌ ﴿٧٣﴾

पूज्य छैन तथा यदि यिनीहरू आफ्नो कथनबाट रोकिएनन् भने उनीहरूमध्ये जो कुफ्रमा रहनेछन्, उनीहरूलाई कठोर यातनाहरू अवश्य पुग्नेछन् ।

اَفَلَا يَتُوۡبُوۡنَ اِلَى اللّٰهِ وَيَسۡتَغۡفِرُوۡنَهٗ ؕ وَاللّٰهُ غَفُوۡرٌ رَّحِيۡمٌ ﴿٧٤﴾

(७४) यिनीहरू अल्लाह (तआला) तिर किन नतमस्तक हुँदैनन् तथा किन क्षमा-याचना गर्दैनन् ? अल्लाह (तआला) अत्याधिक क्षमाशील तथा कृपालु छ ।

مَا الۡمَسِيۡحُ ابۡنُ مَرۡيَمَ اِلَّا رَسُوۡلٌ ۚ قَدۡ خَلَتۡ مِنۡ قَبۡلِهِ الرُّسُلُ ؕ وَاُمُّهٗ صِدِّيۡقَةٌ ؕ كَانَا يَاۡكُلٰنِ الطَّعَامَ ؕ اُنۡظُرۡ كَيۡفَ نُبَيِّنُ لَهُمُ الۡاٰيٰتِ ثُمَّ انۡظُرۡ اَنّٰى يُؤۡفَكُوۡنَ ﴿٧٥﴾

(७५) मरियमका पुत्र मसीह मात्र पैग़म्बर हुनुको अतिरिक्त अरू केही पनि होइन । त्यसभन्दा पूर्व पनि धेरै पैग़म्बर भइसकेका छन् । त्यसकी माता एउटी पवित्र एवं सत्यवादी स्त्री थिइन् ।[१] दुबै (माता-पुत्र) भोजन गर्ने गर्दथे ।[२] तपाईं हेर्नुस् हामी कसरी तर्क उनका समक्ष प्रस्तुत गर्दछौं, अनि विचार गर्नुस् कि उनी कसरी विमुख हुन जान्छन् ।

[१](صدِّيقة) को अर्थ हो विश्वासी तथा पवित्र अर्थात् तिनले पनि आदरणीय ईसाको दूतत्वलाई मानिन् तथा त्यसमा विश्वास गरिन् । यसको अर्थ यो भयो कि तिनी ईशदूत थिइनन्, जस्तो कि केही मानिसहरूलाई भ्रम भएको छ । तथा उनीहरूले आदरणीय मरियमसहित आदरणीय सारह (इसहाककी आमा) तथा आदरणीय मूसाकि आमालाई ईशदूत बनाइदिएका छन् । जसको तर्क यो दिन्छन् कि प्रथम वर्णित दुई स्त्रीहरूबाट स्वर्गदूतले कुरा गरे तथा आदरणीय मूसाकी मातालाई स्वयं अल्लाह तआलाले वह्यी गऱ्यो । यो कुरा गर्नु तथा उपदेश दिनु दूतत्वको तर्क हो । परन्तु अधिकतर विद्वानहरूको विचारले यो प्रमाण यस्तो छैन जुन कुरआनको स्पष्ट कथनको तुलना गर्न सकोस्, जुन कुरआनले स्पष्टरूपले वर्णन गरेको छ कि हामीले जति पनि रसूल पठायौं ती पुरूष थिए (सूरः यूसुफ-१०९)

[२]यसमा आदरणीय मसीह तथा आदरणीय मरियम दुवैको पूज्य नहुने तथा मनुष्य हुने कुरोलाई प्रमाणित गरेको छ किनभने भोजन गर्नु, यो मनुष्यको आवश्यकता तथा इच्छाहरूको अनुरूप छ । जो ईश छ, त्यो त यी गुणहरूबाट रहित छ, बरू हरप्रकारले रहित हुन्छ । अर्थात् दुवै साधारण मनुष्य थिए तथा उनीहरूमा सबै मानवीय विशेषताहरू पाइन्थे ।

قُلْ أَتَعْبُدُونَ مِن دُونِ ٱللَّهِ مَا لَا يَمْلِكُ لَكُمْ ضَرًّا وَلَا نَفْعًا ۚ وَٱللَّهُ هُوَ ٱلسَّمِيعُ ٱلْعَلِيمُ ﴿٧٦﴾

(७६) तपाईं भनिदिनुस् कि के तिमी अल्लाहको अतिरिक्त उनीहरूलाई पूज्दछौं जो न त तिम्रो हानिका मालिक हुन् तथा न कुनै प्रकारको लाभका, अल्लाह (तआ़ला) नै राम्रो श्रोता तथा पूर्णरुपमा ज्ञाता छ ।[1]

قُلْ يَٰٓأَهْلَ ٱلْكِتَٰبِ لَا تَغْلُوا۟ فِى دِينِكُمْ غَيْرَ ٱلْحَقِّ وَلَا تَتَّبِعُوٓا۟ أَهْوَآءَ قَوْمٍ قَدْ ضَلُّوا۟ مِن قَبْلُ وَأَضَلُّوا۟ كَثِيرًا وَضَلُّوا۟ عَن سَوَآءِ ٱلسَّبِيلِ ﴿٧٧﴾

(७७) भनिदिनुस्, हे अहले किताब ! आफ्नो धर्ममा अनर्थ अतिश्योक्ति नगर ।[2] तथा उनीहरूको इन्द्रीय इच्छाहरूको अनुकरण नगर, जो अघिदेखि विचलित भइसकेका छन्[3] तथा धेरैलाई विचलित पारिसकेका छन् । तथा सोझो मार्गबाट विचलित भइसकेका छन् ।

لُعِنَ ٱلَّذِينَ كَفَرُوا۟ مِنۢ بَنِىٓ إِسْرَٰٓءِيلَ عَلَىٰ لِسَانِ دَاوُۥدَ وَعِيسَى ٱبْنِ مَرْيَمَ ۚ

(७८) इस्राईलको सन्तानका क़ाफिरहरूलाई (आदरणीय) दाऊद तथा (आदरणीय) ईसा पुत्र मरियमको मुखबाट धिक्कारियो ।[4] यसकारण

[1]यी मूर्तिपूजकहरूको कुबुद्धिलाई स्पष्ट गरिदैछ कि उनीहरूले यस्तालाई पूज्य बनाएका छन् जो कसैलाई न लाभ पुऱ्याउन सक्दछन् तथा न हानि, बरू लाभ-हानि त टाढाको कुरो हो, उनी त कुनै कुरालाई सुन्न तथा कसैको दशा जान्ने शक्ति नै राख्दैनन् । यो शक्ति केवल अल्लाहकै हो । यसकारण संकट हटाउने त्यही मात्र हो ।

[2]अर्थात सत्यको अनुसरण गर्नुमा सीमा उल्लंघन नगर तथा जसलाई आदर गर्न आदेश दिइएको छ, त्यसमा अतिश्योक्ति गरी नबूअतको पदबाट उठाएर पूज्यको स्थानमा आसीन नगरिहाल, जस्तो कि आदरणीय मसीहको पक्षमा तिमीले गऱ्यौ । अतिश्योक्ति प्रत्येक समयमा शिर्क तथा विचलनको साधन रहेको छ । मुसलमान पनि यस अतिश्योक्तिबाट सुरक्षित रहन सकेनन् । उनीहरूले केही धर्मविधहरूको विषयमा अतिश्योक्ति गरे तथा उनका विचार, कथन यहाँसम्मकि उनीसित सम्बन्धित धार्मिक निर्णय तथा विचारहरूलाई पनि रसूलल्लाहु सल्लल्लाहु अलैहि वसल्लमको हदीसको अपेक्षा प्राथमिकता दिए ।

[3]अर्थात आफूभन्दा पूर्वका मानिसहरूको पछि नलाग, जो एक नबीलाई पूज्य बनाएर स्वयं कुपथ भएका छन् तथा अरूहरूलाई पनि कुमार्गी बनाएका छन् ।

[4]अर्थात ज़बूरमा जुन आदरणीय दाऊदमाथि तथा इंजीलमा जुन आदरणीय ईसामाथि अवतरित भए तथा अब यही धिक्कार कुरआन करीमद्वारा गरिदैछ, जुन परम आदरणीय महम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम माथि अवतरित भएको छ । धिक्कारको अर्थ हो अल्लाहको कृपा तथा अनुग्रहबाट दूरी ।

ذٰلِكَ بِمَا عَصَوْا وَّكَانُوْا يَعْتَدُوْنَ ۝٧٨

उनीहरू अवज्ञा गर्दथे तथा सीमाको उल्लंघन गर्दथे ।[1]

كَانُوْا لَا يَتَنَاهَوْنَ عَنْ مُّنْكَرٍ فَعَلُوْهُ ۭ لَبِئْسَ مَا كَانُوْا يَفْعَلُوْنَ ۝٧٩

(७९) उनीहरू आपसमा एक-अर्कालाई नराम्रा कामहरूबाट जुन उनीहरू गर्दथे, रोक्दैनथे ।[2] जे-जति यिनीहरू गर्दथे त्यो अवश्य धेरै नराम्रो थियो ।

تَرٰى كَثِيْرًا مِّنْهُمْ يَتَوَلَّوْنَ الَّذِيْنَ كَفَرُوْا ۭ لَبِئْسَ مَا قَدَّمَتْ لَهُمْ اَنْفُسُهُمْ اَنْ سَخِطَ اللّٰهُ عَلَيْهِمْ وَفِي الْعَذَابِ هُمْ خٰلِدُوْنَ ۝٨٠

(८०) उनीहरू मध्येका अधिकतरलाई तपाईंले देख्नुहुनेछ कि उनी काफ़िरहरूसित मित्रता गर्दछन् । जे-जति उनीहरूले आफ्ना अगाडि पठाएका छन् त्यो साह्रै नराम्रो छ, (यो) कि अल्लाह (तआ़ला) उनीहरूसित अप्रसन्न भयो तथा उनीहरू सधैं यातनामा रहनेछन् ।[3]

[1] यी धिक्कारका कारण हुन् (१) अवज्ञाकारिता, अर्थात् कर्तव्यको त्याग तथा निषेधकर्म गर्नु । उनीहरूले अल्लाहको अवज्ञा गरे । (२) अतिक्रमण, अर्थात् धर्ममा अतिशय नवीन रीतिहरू बनाएर उनीहरूले उल्लंघन गरे ।

[2] यसभन्दा अधिक यो कि उनीहरू एक-अर्कालाई नराम्रो कुरोबाट रोक्दैनथे, जो स्वयं एक ठूलो अपराध हो । केही व्याख्याकारीहरूले यसै निषेध त्यागलाई अवज्ञता तथा अतिक्रमण मानेका छन्, जुन धिक्कारको कारण बन्यो । अन्तत: दुवै अवस्थाहरूमा नराम्रोलाई देखेर नराम्रोबाट नरोक्नु, बहुत ठूलो अपराध तथा धिक्कार एवं अल्लाहको क्रोधको कारण हो । हदीसमा पनि यस अपराधमा अत्याधिक घोर चेतावनीहरू आएको छ । एक हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "सर्वप्रथम कमी जुन इस्राईलको सन्तानमा आया त्यो यो थियो कि एक व्यक्तिले अर्को व्यक्तिलाई नराम्रो गरिराखेको देख्दा भन्थ्यो कि अल्लाहसित तर्स तथा यो नराम्रो कुरो छाडिदेउ, यो तिम्रो लागि उचित छैन । परन्तु अर्को दिन पुन: उसँग त्यसलाई खान-पान तथा उठ-बसमा कुनै संकोच अथवा लज्जाको आभास हुँदैनथ्यो (अर्थात् त्यो सँग एक प्राण दुई शरीर तथा मित्र भइहाल्थे) जबकि ईमानको याचना यो थियो कि उसित घृणा तथा सम्बन्ध विच्छेद गर्दथ्यो जसकारण अल्लाहले उनीहरूका बीच आपसमा कटुता पारिहाल्यो तथा अल्लाहको धिक्कारका पात्र भए ।" पुन: भन्नुभयो कि, "अल्लाहको कसम तिमी अवश्य मानिसहरूलाई पुण्य गर्ने आदेश दिदैगर तथा नराम्रो कामबाट रोज्दै गर, अत्याचारीको हात समातिहाल्ने गर (नत्र तिम्रो पनि यही दशा हुनेछ)" "अल-हदीस" (अबु दाऊद किताबुल मलाहिम संख्या ४३३६) एक अर्को कथनमा यस कर्तव्यको त्यागमा यो चेतावनी दिइएको छ कि तिमी अल्लाहको यातनाहरूको योग बनिहाल्नेछौ, तिमी अल्लाहसित प्रार्थना गर्दा पनि स्वीकार हुनेछैन । (मुसनद अहमद भाग-५, पृष्ठ-३८८)

[3] यो काफ़िरहरूसित मित्रताको परिणाम हो कि अल्लाह तआ़ला उनीहरूमाथि क्रोधित भयो यसै क्रोधको कारण स्थायीरूपले नर्कको यातना छ ।

وَلَوْ كَانُوا يُؤْمِنُونَ بِاللَّهِ وَالنَّبِيِّ وَمَا أُنْزِلَ إِلَيْهِ مَا اتَّخَذُوهُمْ أَوْلِيَاءَ وَلَٰكِنَّ كَثِيرًا مِنْهُمْ فَاسِقُونَ ﴿٨١﴾

(८१) यदि उनीहरूलाई अल्लाह (तआला) मा, नबीमा तथा जे अवतरित गरिएको छ, त्यसमा ईमान भएको भए, यिनी काफिरहरूसित मित्रता गर्दैनथे, परन्तु उनीमध्येबाट अधिकतर दुराचारी (गलतकार) छन् ।[1]

لَتَجِدَنَّ أَشَدَّ النَّاسِ عَدَاوَةً لِلَّذِينَ آمَنُوا الْيَهُودَ وَالَّذِينَ أَشْرَكُوا ۖ وَلَتَجِدَنَّ أَقْرَبَهُمْ مَوَدَّةً لِلَّذِينَ آمَنُوا الَّذِينَ قَالُوا إِنَّا نَصَارَىٰ ۚ ذَٰلِكَ بِأَنَّ مِنْهُمْ قِسِّيسِينَ وَرُهْبَانًا وَأَنَّهُمْ لَا يَسْتَكْبِرُونَ ﴿٨٢﴾

(८२) निःसन्देह तपाईंले ईमानवालाहरूको कटुशत्रु यहूदीहरू तथा मुर्तिपूजकहरूलाई पाउनु हुनेछ ।[2] तथा ईमानवालाहरूको सबभन्दा अधिक निकटताको मित्रता तपाईं अवश्य उनीहरूमा पाउनुहुनेछ, जो आफूलाई ईसाई भन्दछन्, यो यसकारण कि उनीहरूमा विद्वान तथा बैरागी छन् तथा यसकारण कि उनीहरू घमण्ड गर्दैनन् ।[3]

[1]यसको अर्थ यो हो कि जुन व्यक्तिको अन्तरमा सत्य रूपमा विश्वास हुनेछ, त्यो धर्मभ्रष्टहरूबाट कहिल्यै मित्रता गर्नेछैन ।

[2]यसकारण कि यहूदीहरूमा शत्रुता तथा इन्कार, सत्यबाट विमुखता तथा अंहकार, तथा ज्ञानी एवं ईमानवालाहरूको आलोचनको भावना धेरै पाइन्छ । यही कारण छ कि नबीहरूको हत्या तथा उनलाई भुठ्लाउनु उनको आचरण रहेको छ । यहाँसम्म कि उनीहरूले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको हत्याको कैयौंपटक षड्यन्त्र रचे । उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि जादु पनि गरे, हरेक प्रकारले हानि पुऱ्याउने घृणित योजना बनाए तथा यस सम्बन्धमा मूर्तिपूजकहरूको पनि यही दशा रहेको छ ।

[3](رُهبان) बाट तात्पर्य पुनीत उपासक एवं वैरागी तथा (قسّيسين) बाट तात्पर्य ज्ञानी तथा बक्ता छ अर्थात् यी ईसाईहरूमा ज्ञान एवं नम्रता छ, यसकारण उनीहरूमा यहूदीहरूकै जस्तै इन्कार तथा अंहकार छैन । यसका अतिरिक्त ईसाई धर्ममा क्षमाको शिक्षाको प्रधानता छ । यहाँसम्मकि उनीहरूको ग्रन्थमा लेखिएको छ कि कोही तिम्रो गालाको दायाँपट्टि हिर्काउन्छ भने बायाँ गाला पनि त्यसको सामुन्ने गरिदेउ, यी कारणहरूले यिनी यहूदीहरूको अपेक्षा मुसलमानहरूसित निकट छन् । ईसाईहरूको यो आचरण यहूदीहरूको सापेक्ष छ, तैपनि जहाँसम्म इस्लामसित शत्रुताको सम्बन्ध छ, केही अन्तर सहित ईसाईहरूमा पनि विद्यमान छ । जस्तो कि ईसाईहरू तथा मुसलमानहरू बीच शताब्दीयौदेखि जारी युद्धबाट स्पष्ट छ तथा वर्तमानमा पनि जारी छ र अहिले त इस्लामको विरोधमा दुबै मिलेर कार्यरत छन् यसकारण इस्लामले दुबैको मित्रताबाट मनाही गरेको छ ।

وَإِذَا سَمِعُوا مَا أُنزِلَ إِلَى الرَّسُولِ تَرَىٰ أَعْيُنَهُمْ تَفِيضُ مِنَ الدَّمْعِ مِمَّا عَرَفُوا مِنَ الْحَقِّ ۖ يَقُولُونَ رَبَّنَا آمَنَّا فَاكْتُبْنَا مَعَ الشَّاهِدِينَ ﴿٨٣﴾

(८३) तथा जब उनी रसूलतिर अवतरित भएको (सन्देश) सुन्दछन्, तब तपाईं उनका आँखाबाट बगिरहेको अश्रुको धारा देख्नुहुन्छ, यसकारणले कि उनीहरूले सत्यलाई चिने । उनी भन्दछन् कि हे हाम्रा प्रभु ! हामी मुसलमान भयौं । तसर्थ तिमीले हामीलाई पनि साक्षीहरूमा लेख ।

وَمَا لَنَا لَا نُؤْمِنُ بِاللَّهِ وَمَا جَاءَنَا مِنَ الْحَقِّ وَنَطْمَعُ أَن يُدْخِلَنَا رَبُّنَا مَعَ الْقَوْمِ الصَّالِحِينَ ﴿٨٤﴾

(८४) तथा हामीले अल्लाहमाथि र जुन सत्य हाम्रो पासमा पुगेको छ त्यसमा विश्वास किन नगर्ने जबकि हामीलाई आशा छ कि हाम्रो पालनकर्ताले हामीलाई असल मानिसहरूसँग (स्वर्गमा) प्रविष्ट गर्नेछ ।[1]

[1]इथोपिया (हब्शा) मा जहाँ मुसलमान आफ्ना मक्की युगमा दुईपटक हिज़रत (प्रस्थान) गरेर गए । असहमः नजाशीको राज्य थियो, यो इसाई देश थियो । यो आयत इथोपिया निवासी इसाईहरूको बारेमा उत्रेको हो परन्तु कथनहरूको आधारमा नबी सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय अम्र बिन उमैया जमरीलाई आफ्नो पत्र दिएर नजाशीको पासमा पठाउनु भएको थियो, जुन उनले गएर त्यसलाई सुनाए । नजाशीले त्यो पत्र सुनेर इथोपियामा रहँदै आएका प्रवासी मुसलमानहरू तथा आदरणीय जाफ़र पुत्र अबू तालिबलाई आफ्नो पासमा बोलायो तथा आफ्ना विद्वान, पूजारी, पादरीहरू आदिलाई पनि एकत्रित गऱ्यो, अनि आदरणीय जाफ़रलाई कुर्आन करीम पढ्न आदेश दियो । आदरणीय जाफ़रले सूरः मरियम पढ्नु भयो, जसमा आदरणीय ईसाको चमत्कारिक जन्म तथा उनको भक्तित्व तथा रिसालत (दूतत्व) को वर्णन छ, जसलाई सुनेर उनी बडो प्रभावित भए तथा आँखाबाट अश्रु प्रवाहित भए एवं ईमान स्थापित गरे । केही मानिसहरू भन्छन् कि नजाशीले आफ्ना केही धर्मज्ञहरूलाई नबी सल्लल्लाहु अलैहि वसल्लमको पास पठायो । जब उहाँ सल्लल्लाहु अलैहि वसल्लमले कुर्आन सुनाउनु भयो तब तिनका आँखाबाट अश्रुको धारा प्रवाहित भयो तथा ईमान ल्याए । (फ़तहुल क़दीर) यी आयतहरूमा कुर्आन करीम सुनेर उनीमाथि जुन प्रभाव भयो त्यसको चित्रण गरिएको छ । तथा उनीहरूको विश्वास गर्नुको विवरण छ, पवित्र कुर्आनमा अन्य स्थानमा पनि ईसाईहरूको यसप्रकार ईमान स्थापित कुरोको वर्णन छ । जस्तैः

﴿وَإِنَّ مِنْ أَهْلِ الْكِتَابِ لَمَن يُؤْمِنُ بِاللَّهِ وَمَا أُنزِلَ إِلَيْكُمْ وَمَا أُنزِلَ إِلَيْهِمْ خَاشِعِينَ لِلَّهِ﴾ (آل عمران : ١٩٩)

فَاَثَابَهُمُ اللّٰهُ بِمَا قَالُوْا جَنّٰتٍ تَجْرِیْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِیْنَ فِیْهَا ؕ وَ ذٰلِكَ جَزَآءُ الْمُحْسِنِیْنَ ﴿۸۵﴾

(८५) त अल्लाहले उनको यस प्रार्थनाको कारण यस्ता उद्यान दियो जसमा नहरहरू प्रवाहित छन्, जसमा सधैं निवास गर्नेछन् तथा यही सदाचारीहरूको प्रत्युपकार हो ।

وَ الَّذِیْنَ كَفَرُوْا وَ كَذَّبُوْا بِاٰیٰتِنَاۤ اُولٰٓىِٕكَ اَصْحٰبُ الْجَحِیْمِ ﴿۸۶﴾

(८६) तथा जो अविश्वासी भए एवं हाम्रा आयतहरूलाई झुठ्लाए तिनै नरकवासी हुन् ।

یٰۤاَیُّهَا الَّذِیْنَ اٰمَنُوْا لَا تُحَرِّمُوْا طَیِّبٰتِ مَاۤ اَحَلَّ اللّٰهُ لَكُمْ وَ لَا تَعْتَدُوْا ؕ اِنَّ اللّٰهَ لَا یُحِبُّ

(८७) हे निष्ठावानहरू ! ती पवित्र वस्तुहरूलाई अवैध नबनाउ जसलाई अल्लाहले तिम्रो लागि वैध बनायो[1] तथा अतिक्रमण नगर,

---

"निःसन्देह अहले किताबमा केही यस्ता पनि छन्, जो अल्लाह तथा त्यस किताबमा जो तिमीमाथि अवतरित गरिएको छ तथा त्यसमा जे उनीमाथि अवतरित गरिएको थियो, ईमान राख्दछन्, तथा अल्लाहका समक्ष विनती गर्दछन्, ।" (सूरः आले-इमरान-१९९)

तथा हदीसमा वर्णित छ कि जब नज़ाशीको निधनको समाचार नबी सल्लल्लाहु अलैहि वसल्लमलाई प्राप्त भयो तब उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सहावासित भन्नुभयो कि, "(इथोपिया) हब्शामा तिम्रो भाइको देहान्त भएको छ, त्यसको नमाज़ पढ ।" अतः एक मरूभूमिमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले त्यसको नमाज जनाज़ः (ग़ायबाना) पढ्नु भयो । (सहीह बुख़ारी मनाकिबुल अन्सार व किताबूल जनाएज़ र सहीह मुस्लिम किताबुल जनाएज़) । एउटा अर्को हदीसमा यस्ता अहले किताबको विषयमा जसले नबी सल्लल्लाहु अलैहि वसल्लमको नबूअत (दूतत्व) मा निष्ठा व्यक्त गरे, भनिएको छ कि उनलाई दुई गुना प्रतिफल प्राप्त हुनेछ । (सहीह बुख़ारी किताबुल इल्म वल निकाह)

[1]हदीसमा वर्णित छ कि एउटा व्यक्ति नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भयो तथा भन्नथाल्यो हे रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम ! जब म मासु खान्छु तब सम्भोगको इच्छा प्रबल हुने गर्दछ, यसकारण मैले आफूलाई मासु हराम (निषेध) गरेको छु, जसमा यो आयत उत्र्यो । (सहीह तिर्मिजी, अलबानी, भाग-३, पृष्ठ-४६) यसैप्रकार उत्नर्नुको कारणका अतिरिक्त अन्य कथनहरूबाट सिद्ध छ कि केही सहचर संयम तथा आराधनाको लागि केही वैध वस्तुहरूबाट (जस्तै स्त्रीहरूसित विवाह गर्नु, रातको समय सुत्नु तथा दिनको समय खान-पिउनबाट) रोकिन चाहन्थे । नबी सल्लल्लाहु अलैहि वसल्लमलाई यसको सूचना प्राप्त भयो तब उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यस्तो गर्नबाट रोक्नुभयो तथा मनाही गर्नुभयो । आदरणीय उस्मान बिन मज़ऊन पनि आफ्नो पत्नीबाट अलग्ग बस्न थालेका थिए,

ٱلْمُعْتَدِينَ ﴿٨٧﴾

निःसन्देह अल्लाह अतिकारीहरूसित प्रेम गर्दैन ।

وَكُلُوا۟ مِمَّا رَزَقَكُمُ ٱللَّهُ حَلَٰلًا طَيِّبًا ۚ وَٱتَّقُوا۟ ٱللَّهَ ٱلَّذِىٓ أَنتُم بِهِۦ مُؤْمِنُونَ ﴿٨٨﴾

(८८) तथा अल्लाह (तआ़ला) ले जुन कुराहरू तिमीलाई दिएको छ, त्यसबाट वैधानिक रूचिकर वस्तुहरू खाउ तथा अल्लाह तआ़लासित तर्स, जसमाथि तिमी ईमान राख्दछौ ।

لَا يُؤَاخِذُكُمُ ٱللَّهُ بِٱللَّغْوِ فِىٓ أَيْمَٰنِكُمْ وَلَٰكِن يُؤَاخِذُكُم بِمَا عَقَّدتُّمُ ٱلْأَيْمَٰنَ ۖ فَكَفَّٰرَتُهُۥٓ إِطْعَامُ

(८९) अल्लाह तआ़ला तिम्रा कसमहरूमध्ये बेकार कसमहरूमा तिमीलाई समात्दैन । परन्तु पकड त्यसको गर्दछ, जुन कसमहरूलाई तिमी दृढ गर्दछौ ।[1] त्यसको प्रायश्चित दस गरीबहरूलाइ

---

उनको पत्नीको शिकायत (गुनासो) मा उनलाई पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले रोक्नुभयो । (हदीसका किताबहरू)

अतः यस आयत तथा हदीसबाट ज्ञान भयो कि अल्लाहबाट उचित गरिएको वस्तुलाई निषेध गर्नु अथवा त्यसबाट त्यसै बच्नु उचित छैन, चाहे त्यसको सम्बन्ध खान-पानसित होस् अथवा वस्त्रसित होस् अथवा प्रिय अथवा उचित इच्छाहरूसित होस् ।

**समस्या**–यसप्रकार यदि कुनै व्यक्ति कुनै कुरोलाई आफूमाथि निषेध गर्नेछ भने त्यो निषेधित हुनेछैन, पत्नीबाहेक । परन्तु यस अवस्थामा केही विद्वानहरूको कथन छ कि आफ्नो शपथको प्रायश्चित गर्नुपर्ने छ तथा केहीका निकट प्रायश्चित आवश्यक छैन । इमाम शौकानी भन्नुहुन्छ कि सहीह हदीसबाट यस कुरोको पुष्टि हुन्छ, किनभने नबी सल्लल्लाहु अलैहि वसल्लमले यस अवस्थामा कसैलाई कसमको दण्ड तिर्न आदेश दिनुभएको छैन । इमाम इब्ने कसीर भन्नुहुन्छ कि यस आयतको पश्चात अल्लाह तआ़लाले कसमको प्रायश्चितको वर्णन गरेको छ जसबाट ज्ञात हुन्छ कि कुनै अवर्जित पदार्थलाई वर्जित गर्न यो कसमको समान छ, जुन प्रायश्चित दिनुका कारण हो । परन्तु यो तर्क सहीह हदीसको उपस्थितिमा नगण्य छ । त्यही उचित छ जुन इमाम शौकानीको कथन छ ।

[1]शपथलाई अरबी भाषामा हलफ़ अथवा यमीन भन्दछन् जसका बहुवचन अहलाफ़ तथा ऐमान हुन् । शपथका तीन भेद हुन्छन्: (१) लग़्व २) (ग़मूस (३) मोअक्कद । (१) लग़्व त्यो कसम हो जुन मनुष्य कुरै-कुरामा स्वभाविक रूपले बिना कुनै प्रयत्न तथा ध्येयले खाईराख्छ । यसमा कुनै पकड हुनेछैन । (२) ग़मूसः त्यो झूठो कसम (शपथ) हो, जुन मनुष्य धोका दिन वा छलको लागि खान्छ । यो महापाप हो, बरू अति महापाप हो । परन्तु यसको कुनै प्रायश्चित छैन । (३) मोअक्कद त्यो कसम हो जुन मनुष्य आफ्ना

عَشَرَةِ مَسٰكِيْنَ مِنْ اَوْسَطِ مَا تُطْعِمُوْنَ اَهْلِيْكُمْ اَوْ كِسْوَتُهُمْ اَوْ تَحْرِيْرُ رَقَبَةٍ ۭ فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ ثَلٰثَةِ اَيَّامٍ ۭ ذٰلِكَ كَفَّارَةُ اَيْمَانِكُمْ اِذَا حَلَفْتُمْ ۭ وَاحْفَظُوْٓا اَيْمَانَكُمْ ۭ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمْ اٰيٰتِهٖ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٨٩﴾

खाना खुवाउनु पर्नेछ मध्यम श्रेणीको, जुन आफ्ना घरवालाहरूलाई खुवाउँछौ ।[1] अथवा उनलाई वस्त्र दिन ।[2] अथवा एक दास अथवा दासीलाई स्वतन्त्र गर्नु हो ।[3] तथा जसबाट यो हुन सक्दैन त्यो तीन दिन ब्रत बसोस् ।[4] यो तिम्रा कसमहरूको प्रायश्चित हो, जबकि तिमी कसम खाइसकेका छौ तथा आफ्ना कसमहरूलाई ध्यानमा राख । यसप्रकार अल्लाह तआला तिम्रो निम्ति आफ्ना आदेशहरूलाई वर्णन गर्दछ, ताकि तिमी कृतज्ञता व्यक्त गर ।

कुरामा जोड तथा परिपक्कताको लागि जानी-जानी खान्छ । यसप्रकारको कसमलाई यदि तोड्छ भने त्यसको त्यो प्रायश्चित पूरा गर्नेछ, जसको अघिको आयतमा वर्णन छ ।

[1]यस खानाको मात्राको लागि कुनै एक सहीह कथन छैन । यसकारण मतभेद छ । परन्तु इमाम शाफ़ईले त्यस हदीसबाट तर्क दिँदै, जसमा रमज़ानमा रोजाको स्थितिमा पत्नीसित संभोग गर्नुको जुन प्रायश्चित छ, लगभग आधा किलो प्रति निर्धनको खाना निर्धारित गरिएको छ । किनभने नबी सल्लल्लाहु अलैहि वसल्लमले त्यस व्यक्तिलाई पत्नीसँग ब्रतको अवस्थामा प्रायश्चित स्वरूप १५ साआ ख़जूर दिलाउनु भएको थियो, जसलाई साठी निर्धनहरूमा बाँडिएको थियो । एक साआमा चार मुद्द तथा एक मुद्दमा (लगभग) ६०० ग्राम हुन्छ) यस आधारमा झोल नभएको सालन दस गरीबहरूलाई दिनको लागि दस मुद्द (अर्थात् ६ किलो) भोजन प्रायश्चित हुनेछ । (इब्ने क़सीर)

[2]वस्त्रको विषयमा पनि मतभेद छ । प्रत्यक्ष रूपले तात्पर्य वस्त्रको जोडा हो, जसमा मनुष्य नमाज़ पढ्न सकोस् । केही विद्वानहरूले भोजन तथा वस्त्र दुबैको लागि प्रथा तथा प्रचलनलाई विश्वस्त मान्नु भएको छ ।

[3]केही विद्वानहरूले भूलले हत्याको प्रायश्चितमा अनुमान गरेर दास तथा दासीहरूको लागि ईमानको प्रतिबन्ध लगाएका छन् । इमाम शौकानी भन्नुहुन्छ, आयत सामान्य छ, जस अर्न्तगत मोमिन एवं क़ाफिरहरू दुबै आउँछन् ।

[4]अर्थात् जुन व्यक्तिलाई माथिका तीनै विषयहरूबाट कुनैको शक्ति छैन, त्यो तीन दिनसम्म ब्रत बसोस । केही धर्मज्ञ निरन्तर ब्रत बस्नुको पक्षमा छन् तथा केहीका विचारले दुबै प्रकार उचित छन् ।

(९०) हे निष्ठावानहरू ! मदिरा एवं जुवा तथा मूर्तिहरूको स्थान एवं पासाहरू नराम्रा शैतानी काम हुन्, अतः तिमी यसबाट अलग्ग रह ताकि सफल होउ ।[1]

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓاْ إِنَّمَا ٱلۡخَمۡرُ وَٱلۡمَيۡسِرُ وَٱلۡأَنصَابُ وَٱلۡأَزۡلَٰمُ رِجۡسٞ مِّنۡ عَمَلِ ٱلشَّيۡطَٰنِ فَٱجۡتَنِبُوهُ لَعَلَّكُمۡ تُفۡلِحُونَ ٩٠

(९१) शैतान चाहन्छ नै कि मदिरा तथा जुवाद्वारा तिमीहरूमा शत्रुता एवं द्वेष पारिदेओस् तथा तिमीलाई अल्लाहको स्मरण तथा नमाज़बाट रोकोस्, त तिमी रोकिन्छौ कि रोकिन्नौ ?[2]

إِنَّمَا يُرِيدُ ٱلشَّيۡطَٰنُ أَن يُوقِعَ بَيۡنَكُمُ ٱلۡعَدَٰوَةَ وَٱلۡبَغۡضَآءَ فِي ٱلۡخَمۡرِ وَٱلۡمَيۡسِرِ وَيَصُدَّكُمۡ عَن ذِكۡرِ ٱللَّهِ وَعَنِ ٱلصَّلَوٰةِۖ فَهَلۡ أَنتُم مُّنتَهُونَ ٩١

(९२) अल्लाहको आज्ञाको पालन गर तथा रसूलको अनुसरण गर र सतर्क रह तथा यदि तिमीले मुख फर्कायौ भने जानीहाल कि हाम्रो रसूललाई खुला सन्देश पुऱ्याइदिने जिम्मेवारी छ ।

وَأَطِيعُواْ ٱللَّهَ وَأَطِيعُواْ ٱلرَّسُولَ وَٱحۡذَرُواْۚ فَإِن تَوَلَّيۡتُمۡ فَٱعۡلَمُوٓاْ أَنَّمَا عَلَىٰ رَسُولِنَا ٱلۡبَلَٰغُ ٱلۡمُبِينُ ٩٢

[1]यो मदिराको सम्बन्धमा तेस्रो आदेश हो । प्रथम दुई आदेशहरूमा त्यसलाई स्पष्टरूपले निषेधित गरिएको छैन । परन्तु यहाँ त्यो संग जुवा, पूजा स्थल तथा स्थानहरू तथा शगूनका तीरहरूलाई दूषित एवं राक्षसी कार्य घोषित गरेर स्पष्ट शब्दहरूमा यी सबैबाट सुरक्षित रहन आदेश दिइएको छ । यसबाहेक यस आयतमा मदिरा एवं जुवाको सन्दर्भमा केही अधिक क्षतिको वर्णन गरेर प्रश्न गरिएको छ कि अझै पनि रोकिन्छन् वा रोकिदैनन् । मुसलमान यसबाट अल्लाहको उद्देश्य बुझे तथा त्यसलाई सधैंको निम्ति अवैध माने एवं भने कि (انتهينا ربنا) हाम्रो पालनकर्ता हामीले मान्यौं, (मुसनद अहमद भाग २, पृष्ठ-३५१) परन्तु आधुनिक बुद्धिमान भन्दछन् कि अल्लाहले मदिरालाई वर्जित कहाँ भनेको छ ? यस्तो बुद्धिमा रूनुपर्छ। अर्थात् मदिरालाई दूषित तथा राक्षसी कार्य भनेर त्यसबाट रोकिनुको आदेश दिनु तथा त्यसलाई सफलताको हेतु भन्नु बुद्धिमानहरूको विचारमा निषेधको लागि पर्याप्त छैन । यसको अभिप्राय यो भयो कि अल्लाहको समीप दूषित कार्य पनि उचित छ, राक्षसी कार्य पनि उचित छ । जसको त्यागको आदेश दिन्छ, त्यो पनि उचित छ तथा जसको सन्दर्भमा भनिन्छ कि त्यसलाई गर्नु असफलता तथा त्यसको त्याग सफलताको हेतु हो, त्यो पनि उचित (إنا لله وإنا اليه راجعون) यस्तो बोधबाट हजार पटक शरण, तथा थुक्क छ यस्तो बोधमाथि ।

[2]यी जुवा तथा मदिराका अन्य सामाजिक एवं धार्मिक हानिहरू हुन् जसको वर्णनको आवश्यकता छैन, यसैकारण मदिरालाई सबै कुकर्महरूको जननी भनिन्छ तथा जुवा पनि यस्तै कुलत हो । यो मनुष्यलाई कुनै कामको राख्दैन तथा अधिकतर धनवान एवं वंशगत जागीर दारहरूलाई भिखारी तथा दरिद्र बनाइदिन्छ । हामीलाई अल्लाहले दुबैबाट सुरक्षित राखून् ।

لَيْسَ عَلَى الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ جُنَاحٌ فِيمَا طَعِمُوا إِذَا مَا اتَّقَوْا وَآمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ ثُمَّ اتَّقَوْا وَآمَنُوا ثُمَّ اتَّقَوْا وَأَحْسَنُوا ۗ وَاللَّهُ يُحِبُّ الْمُحْسِنِينَ ﴿٩٣﴾

(९३) यस्ता मानिसहरूको लागि जो निष्ठावान छन् तथा पुण्यको काम गर्दछन्, त्यस कुरामा कुनै पाप छैन जसलाई उनीहरू खान्छन्, पिउँछन्, जबकि उनी अल्लाहसित तर्सन्छन् तथा ईमान राख्दछन् तथा पुण्यको कार्य गर्दछन्, अनि परहेज़गारी (सत्कर्म) गर्दछन् तथा अत्याधिक पुण्यको कार्य गर्दछन्, अल्लाह यस्ता पुण्यकर्ताहरूसित प्रेम गर्दछ ।[1]

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَيَبْلُوَنَّكُمُ اللَّهُ بِشَيْءٍ مِنَ الصَّيْدِ تَنَالُهُ أَيْدِيكُمْ وَرِمَاحُكُمْ لِيَعْلَمَ اللَّهُ مَنْ يَخَافُهُ بِالْغَيْبِ ۚ فَمَنِ اعْتَدَىٰ بَعْدَ ذَٰلِكَ فَلَهُ عَذَابٌ أَلِيمٌ ﴿٩٤﴾

(९४) हे निष्ठावानहरू ! अल्लाह (तआ़ला) केही शिकारद्वारा तिम्रो परीक्षा लिन्छ,[2] जससम्म तिम्रा हात तथा भाला पुग्न सक्नेछन् ।[3] ताकि अल्लाह (तआ़ला) थाहा पाओस् कि कुन व्यक्ति नदेखिकन तसर्न्छ, जो व्यक्ति सीमाभन्दा अगाडि बढ्नेछ त्यसलाई कठोर यातना छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَقْتُلُوا الصَّيْدَ وَأَنْتُمْ حُرُمٌ ۚ وَمَنْ قَتَلَهُ مِنْكُمْ

(९५) हे ईमानवालाहरू ! जब तिमी (हज अथवा उमरःको) एहराम बाँधेको हुन्छौ त शिकार

[1]मदिराको निषेधको पश्चात नबीका सहचरहरूको मनमा यो कुरा आयो कि हाम्रा कैयन् साथी लडाईहरूमा मारिए अथवा स्वभाविक मृत्युले मरे, जबकि उनी मदिरापान गरिराखेका थिए । तसर्थ यस आयतमा यस संशयको निवारण गरिदिइयो, कि यिनको अन्त विश्वास एवं संयममा नै भयो । किनभने त्यसबेला मदिरापान वर्जित भएको थिएन ।

[2]शिकार अरबहरूको जीवन-यापनको एक विशेष साधन थियो, यसकारण एहरामको अवस्थामा यसलाई निषेध गरेर उनको परीक्षा लिइयो । विशेषरूपले हुदैबियामा निवासको समयमा शिकार अधिकरूपले सहाबाका निकट आउँथे, किन्तु तिनै दिनहरूमा यी चार आयतहरू अवतरित भए, जसमा त्यससँग सम्बन्धित आदेश दिइयो ।

[3]निकटका शिकार तथा साना जीव-जन्तु सामान्य रूपले हातले नै समातिन्छन् तथा टाढाका अथवा ठूला पशुहरूको लागि बाँण तथा भाला प्रयोग गरिन्छन्, यसकारण केवल यी दुवैको यहाँ वर्णन गरिएको छ । परन्तु तात्पर्य यो छ कि जुनप्रकारले तथा जुन कुराले पनि शिकार गरियोस्, एहरामको अवस्थामा निषेध छ ।

مُّتَعَمِّدًا فَجَزَآءٌ مِّثْلُ مَا قَتَلَ مِنَ النَّعَمِ يَحْكُمُ بِهِۦ ذَوَا عَدْلٍ مِّنكُمْ هَدْيًۢا بَٰلِغَ ٱلْكَعْبَةِ أَوْ كَفَّٰرَةٌ طَعَامُ مَسَٰكِينَ أَوْ عَدْلُ ذَٰلِكَ صِيَامًا

नगर[1] र तिमीमध्येबाट जसले पनि त्यसलाई मार्दछ भने त्यसले क्षतिपूर्ति गर्नुपर्नेछ उसैको समान[2] पाल्तू पशुबाट जसको निर्णय तिमीमध्येबाट दुई न्यायकारीले गर्नेछन्[3] जुन बलिको लागि काअबा

[1]इमाम शाफ़ईले यसबाट यो भाव निकाल्नु भएको छ कि यिनीबाट केवल ती जनावरहरूको हत्या लिइएको छ, जसको मासु खाइन्छ। धर्तीका अन्य पशुहरूका शिकार उनी उचित मान्दछन् । परन्तु अधिक विद्वानहरूको विचार यो छ कि यसमा खाने योग्य तथा अयोग्यमा कुनै भेद छैन । यसमा दुबै प्रकारका जनावर सम्मिलित छन् । परन्तु ती हानिकारक जीवहरूको हत्या गर्नु उचित छ जसको वर्णन हदीसमा भएको छ तथा उनी पाँच छन् काग, चिल, बिच्छी, मूसा तथा भूस्याहा कुकुर । (सहीह मुस्लिम किताबुल हज, बाब मायनदुबो लिल मुहरिम व गैरेही क़तलुहु मिन-द्वाब्वे फ़िल हिल्ले वल हरमे, तथा मुअ़ता इमाम मालिक) आदरणीय नाफेअ़सित सर्पको विषयमा सोधियो त उहाँले भन्नुभयो कि त्यसलाई मार्नमा कुनै मतभेद छैन । इब्ने क़सीर तथा इमाम अहमद एवं इमाम मालिक तथा अन्य आलिमहरूले ब्वाँसो, हिंस्रक जन्तु, चितुवा, सिंहलाई भुस्याहा कुकुरहरूको समान एहरामको अवस्थामा मार्न आज्ञा दिइएका छन् । (इब्ने क़सीर)

[2]"जानी-जानी" को शब्दबाट केही विद्वानहरूले यो तर्क निकालेका छन् कि बिना प्रयत्न यदि भूलले अन्जानमा हत्या हुन्छ भने त्यसमा प्रतिशोध छैन । परन्तु अधिकतर विद्वानहरूका निकट इच्छित एवं अनेच्छित दुबै अवस्थाहरूमा पशु हत्या गरेमा फ़िदिया (प्रतिशोध) दिनुपर्नेछ। जानी-जानीको कुरा परिस्थितिहरूका अनुसार छ प्रतिबन्धको रूपमा छैन ।

[3]समान पशुबाट तात्पर्य प्रकृति अर्थात् शरीर तथा श्रेणीमा समान हुनु हो मूल्यमा समान हुनु होइन जस्तो कि हनफ़ी समुदायमा छ। जस्तो कि यदि मृगको हत्या भयो भने, त्यसको समान बाखा छ । गाईको समान निलगाई छ । परन्तु जुन जन्तुको समतुल्य पाउन सकिन्न, त्यस अवस्थामा त्यो मूल्यको रूपमा प्रतिशोध लिएर मक्का पुऱ्याइनेछ । (इब्ने क़सीर)

[4]कि हत (हत्या गरिएका) जनावरको समान अमूक जनावर छ तथा यदि त्यसको समान छैन अथवा त्यसको समान उपलब्ध छैन भने त्यसको त्यति मूल्य हो । त्यस मूल्यले अनाज खरीद गरी मक्काका भिखारीहरूमा बाँडिने छ । प्रति भिखारी एक मुद्द अर्थात् ६ सय ग्रामको हिसाबको वितरण गरिनेछ । हनफ़ी समुदायमा दुई मुद्द प्रति भिखारी छ अर्थात् एक किलो दुई सय ग्राम छ ।

لِيَذُوقَ وَبَالَ أَمْرِهِ ۗ عَفَا اللَّهُ عَمَّا سَلَفَ ۚ وَمَنْ عَادَ فَيَنتَقِمُ اللَّهُ مِنْهُ ۗ وَاللَّهُ عَزِيزٌ ذُو انتِقَامٍ ﴿٩٥﴾

पुऱ्याइनेछ,[1] अथवा प्रायश्चित स्वरूप कंगालहरूलाई भोजन दिनुछ वा त्यसको बराबर ब्रत बस्नुछ[2] ताकि आफूले गरिएको दण्ड चाख, जुन पहिले भइसक्यो, अल्लाहले त्यसलाई क्षमा गरिदियो तथा जो यस (निषेधाज्ञा) को पश्चात पुन: यस्तो गर्नेछ, अल्लाह उससित बदला लिनेछ । अल्लाह शक्तिशाली बदला लिन समार्थ्यवान छ ।

أُحِلَّ لَكُمْ صَيْدُ الْبَحْرِ وَطَعَامُهُ مَتَاعًا لَّكُمْ وَلِلسَّيَّارَةِ ۖ وَحُرِّمَ عَلَيْكُمْ صَيْدُ الْبَرِّ مَا دُمْتُمْ حُرُمًا ۗ وَاتَّقُوا اللَّهَ الَّذِي

(९६) तिम्रो लागि समुद्रको शिकार समात्न तथा खान वैध गरिएको छ ।[3] तिम्रो प्रयोगको लागि तथा यात्रीहरूको लागि, तर धर्तीको शिकार अवैध गरियो जबसम्म तिमी एहराम

[1]यो प्रतिशोध जनावर अथवा त्यसको मूल्य काअबा पुऱ्याइनेछ तथा काअ़बाबाट तात्पर्य हरम छ । (फ़तहुल क़दीर) अर्थात् तिनको वितरण हरम मक्कामा बास गर्ने निर्धनहरूमा हुनेछ ।

[2](او) (अथवा) अधिकार दिनको लागि आएको छ अर्थात् निर्धनहरूलाई भोजन गराउनु अथवा त्यसको बराबर ब्रत बस्नु दुवै मध्येबाट कुनै एक कार्य गर्नु उचित छ । हत जनावरको अनुसार भोजन गराउनुमा जुन प्रकारले कमी अथवा अधिकता हुनेछ, त्यसैप्रकार ब्रतहरूमा पनि कमी अथवा अधिकता हुनेछ । जस्तै एहराम लगाएको व्यक्तिले मृग माऱ्यो भने त्यसको समान बक़री (बाखा) छ, यो फ़िदिया हरम मक्क़ामा बलि दिइनेछ । यदि यो पाइएन भने आदरणीय इब्ने अब्बास (रज़ी अल्लाह अन्हु) को अनुसार छ: निर्धनहरूलाई भोजन अथवा तीन ब्रत बस्नु पर्नेछ । यदि त्यसले बाह्रसिंङ्गे, साभर अथवा यो जस्तै कुनै पशु मारेको छ भने त्यसको समतुल्य गाई छ, यदि यो उपलब्ध छैन अथवा यसको मूल्य तिर्ने शक्ति छैन भने बीस निर्धनहरूलाई खाना खुवाउनु पर्नेछ अथवा बीस दिन ब्रत बस्नु पर्नेछ अथवा शुतुरमुर्ग जस्तो पशु मारिन्छ भने त्यसको समतुल्य ऊँट छ र त्यो उपलब्ध नभएमा तीस निर्धनहरूलाई भोजन गराउनु अथवा तीस दिनको ब्रत बस्नु पर्नेछ । (इब्ने क़सीर)

[3](صيد) (सैद) सित तात्पर्य जीवित पशु तथा (طعامه) (तआमुहु) सित तात्पर्य मृत (माछा आदि) हो जसलाई समुद्र अथवा नदीले बाहिर फ्याँकिदेओस् अथवा पानीको सतहमा उत्रेको होस् । जुनप्रकारले हदीसमा स्पष्टरूपले भनिएको छ कि समुद्रको मृत जन्तु वैध छ । (विस्तृत जानकारीको लागि हेर्नुस् तफ़सीर इब्ने क़सीर, तथा नैलुल औतार आदि)

إِلَيْهِ تُحْشَرُونَ ﴿٩٦﴾

को अवस्थामा छौ । तथा अल्लाह (तआ़ला) सित तर्स जसको समीप एकत्रित गरिनेछौ ।

جَعَلَ اللَّهُ الْكَعْبَةَ الْبَيْتَ الْحَرَامَ قِيَامًا لِّلنَّاسِ وَالشَّهْرَ الْحَرَامَ وَالْهَدْيَ وَالْقَلَائِدَ ۚ ذَٰلِكَ لِتَعْلَمُوا أَنَّ اللَّهَ يَعْلَمُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ وَأَنَّ اللَّهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٩٧﴾

(९७) अल्लाहले क़ाअबालाई जुन सम्मानित गृह हो, मानिसहरूका लागि स्थिरताको कारण बनायो तथा सम्मानित महिनालाई एवं हरममा बलि दिइने पशुहरूलाई पनि तथा ती पशुहरूलाई पनि जसका घाँटीमा पट्टा हुन्छन् ।[1] यो यसकाण ताकि तिमी यस कुरामा विश्वास गर कि निःसन्देह अल्लाह (तआ़ला) आकाशहरू तथा धर्ती मुनिका कुराहरूको ज्ञान राख्दछ एवं निःसन्देह अल्लाह सबै विषयलाई राम्ररी जान्दछ ।

اعْلَمُوا أَنَّ اللَّهَ شَدِيدُ الْعِقَابِ وَأَنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿٩٨﴾

(९८) तिमी विश्वास गर कि अल्लाह तआ़ला दण्ड पनि कठोर दिनेछ तथा अल्लाह (तआ़ला) अति क्षमाशील एवं अति कृपालु छ ।

مَّا عَلَى الرَّسُولِ إِلَّا الْبَلَاغُ ۗ وَاللَّهُ يَعْلَمُ مَا تُبْدُونَ وَمَا تَكْتُمُونَ ﴿٩٩﴾

(९९) रसूलको दायित्व त मात्र पुऱ्याउनु हो तथा अल्लाह (तआ़ला) सबै कुरा जान्दछ जे-जति तिमी व्यक्त गर्दछौ तथा जे-जति तिमी लुकाएर राख्दछौ ।

[1]काअ़वालाई वैतुल हराम यसकारण भनिन्छ कि त्यसको सीमाभित्र शिकार गर्नु, वृक्ष काट्नु आदि निषेध छ । यसैप्रकार यदि यसमा पिताको हत्यारासित पनि जम्काभेट हुन्थ्यो त्यससँग भने त्यसलाई छाडिन्नथ्यो । यसलाई (قياما للناس) (मानिसहरूको उभिने तथा निर्वाहको कारण) भनिएको छ, जसको अर्थ हो कि यसद्वारा मक्काका निवासीहरूको प्रवन्ध पनि ठीक छ तथा उनीहरूको निर्वाहको आवश्यकताहरूको उपलब्धिको साधन पनि छ । यसैप्रकार हराम महिनाहरू (रजब, जुलकाअदः, जुलहिज्ज़ा तथा मोहर्रम) तथा हरममा जाने पशु (हदी तथा क़लायेद) पनि मानिसहरूकै निर्वाहका साधन हुन् किनभने यी सबैबाट मक्का निवासीहरूलाई वर्णित लाभ प्राप्त हुन्थ्यो ।

قُلْ لَّا يَسْتَوِي الْخَبِيثُ وَالطَّيِّبُ وَلَوْ أَعْجَبَكَ كَثْرَةُ الْخَبِيثِ ۚ فَاتَّقُوا اللَّهَ يَا أُولِي الْأَلْبَابِ لَعَلَّكُمْ تُفْلِحُونَ ﴿١٠٠﴾

(१००) तपाईं भनिदिनुस कि अपवित्र तथा पवित्र समान छैनन् यद्यपि तपाईंलाई अपवित्रताको अधिकता राम्रो लाग्दछ ।[1] अल्लाह (तआला) सित तर्सिराख हे बुद्धिमानीहरू, ताकि तिमी सफल होउ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَسْأَلُوا عَنْ أَشْيَاءَ إِنْ تُبْدَ لَكُمْ تَسُؤْكُمْ وَإِنْ تَسْأَلُوا عَنْهَا حِينَ يُنَزَّلُ الْقُرْآنُ تُبْدَ لَكُمْ عَفَا اللَّهُ عَنْهَا ۗ وَاللَّهُ غَفُورٌ حَلِيمٌ ﴿١٠١﴾

(१०१) हे निष्ठावानहरू ! यस्ता विषयमा प्रश्न नगर जसलाई व्यक्त गर्दा तिमीलाई नराम्रो लागोस् र यदि कुर्आन अवतरित गरिने बेलामा प्रश्न गर्छौ भने तिमीलाई व्यक्त गरिहालिनेछ,[2] जे भइसक्यो अल्लाहले त्यसलाई क्षमा गरिदियो तथा अल्लाह क्षमाशील तथा सहनशील छ ।

قَدْ سَأَلَهَا قَوْمٌ مِنْ قَبْلِكُمْ ثُمَّ أَصْبَحُوا بِهَا كَافِرِينَ ﴿١٠٢﴾

(१०२) तिमीभन्दा पहिला केही व्यक्तिहरूले यही प्रश्न गरे अनि तिनलाई निर्वाह गर्न सकेनन् ।[3]

[1]अपवित्रबाट तात्पर्य अवैध अथवा अधर्मी अथवा पापी अथवा विकृत तथा पवित्रबाट तात्पर्य वैध, विश्वासी अथवा आज्ञाकारी अथवा राम्रो वस्तु अथवा यी सबै हुन सक्दछन् । अभिप्राय यो हो कि जुन वस्तुमा अपवित्रता हुनेछ, त्यो अविश्वास हो, अवज्ञा हो, दुष्कर्म हो अथवा वस्तुहरू अथवा कथन हो, अधिक संख्याका उपरान्त ती वस्तुहरूको सामना गर्न सक्दैनन्, जसमा अपवित्रता हुनेछ । यी दुबै कुनै पनि अवस्थामा समान हुन सक्दैनन् । यसकारण कि अपवित्रताको कारण त्यस वस्तुको लाभ तथा शुभ समाप्त हुन्छ जबकि जुन वस्तुमा पवित्रता हुनेछ, त्यसबाट त्यसको लाभ तथा शुभमा झन् बृद्धि हुनेछ ।

[2]यो निषेधाज्ञा कुर्आनको अवतरणको समयमा थियो, स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लम पनि सहाबालाई अधिक प्रश्न गर्नबाट रोक्दथे । एक हदीसमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, “मुसलमानहरूमा सबभन्दा ठूलो अपराधी त्यो हो जसको प्रश्न गर्नाको कारण कुनै कुरा अवैध भयो, जबकि त्यसभन्दा पूर्व त्यो वैध थियो ।” (सहीह बुख़ारी, संख्या ७२८९ र सहीह मुस्लिम अल-फज़ायेल बाब तौकिरूहु सल्लल्लाहु अलैहि वसल्लम व तरको इक्सारे सुवालिहि)

[3]कतै त्यस आलस्यको शिकार तिमी बन्न नपुग, जुनप्रकार एकपटक नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, “अल्लाह तआलाले तिमीलाई हज अनिवार्य गरेको छ ।” एउटा व्यक्तिले प्रश्न गऱ्यो, “के प्रत्येक वर्ष ?” उहाँ सल्लल्लाहु अलैहि वसल्लम मौन रहनुभयो । त्यसले आफ्नो प्रश्नलाई तीन पटक पुनरावृत्ति गऱ्यो । अनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, “यदि मैले हो भनिदिएको भए तिम्रो लागि प्रत्येक

(१०३) अल्लाहले आज्ञा दिएको छैन, बहीरःको न साइबःको न वसीलःको न हामको[1] । किन्तु

مَا جَعَلَ اللَّهُ مِنۢ بَحِيرَةٍ وَلَا سَآئِبَةٍ وَلَا وَصِيلَةٍ وَلَا حَامٍ

वर्ष हज़ गर्नु अनिवार्य हुने थियो त प्रत्येक वर्ष हज़ गर्नु तिम्रो लागि सम्भव हुँदैनथ्यो ।" (सहीह मुस्लिम किताबुल हज़ हदीस संख्या ४१२, मुसनद अहमद, सुनन अबू दाऊद, नसाई तथा इब्ने माजा) यसैकारण केही व्याख्याकारहरूले (عفا الله عنها) को एक अर्थ यो पनि वर्णित गरेका छन् कि जुन वस्तुको वर्णन अल्लाह तआलाले आफ्नो किताबमा गर्नु भएको छैन, त यो बुझ कि त्यो ती कुराहरूमध्ये हो, जसलाई अल्लाह तआलाले क्षमा गरिदिएको छ । यसकारण तिमी पनि तिनका विषयमा मौन रह जसरी त्यो मौन छ । (इब्ने कसीर) एक हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले यसको भाव यी शब्दहरूमा सम्झाउनु भएको छ ।

ذروني ما تركتم فإنما أهلك من كان قبلكم كثرة سوالهم، و أختلافهم على أنبيائهم

"तिमीलाई जुन विषयको बारेमा भनिएको छैन तिमी मसित तिनका विषयमा प्रश्न नगर, यसकारण कि तिमीभन्दा पूर्वका समुदायहरूको पतनको कारण उनीहरूका प्रश्नको अधिकता तथा नबीहरूमा मतभेद थियो ।" (सहीह मुस्लिम किताबुल हज्ज़)

[1]यी ती पशुहरूका प्रकार हुन्, जुन अरबवासी आफ्ना मूर्तिहरूका नाममा मुक्त गर्दथे । यिनका विभिन्न व्याख्याहरू गरिएका छन् । आदरणीय सईद बिन मुसय्यिबको कथनानुसार सहीह बुख़ारीमा यसको व्याख्या निम्नरूपले संकलित गरिएको छ । बहीरः- त्यो पशु जसको दूध दुहुनु छाडिदिइन्थ्यो तथा भनिन्थ्यो कि यो मूर्तिहरूको लागि हो । अतः कुनै पनि व्यक्तिले त्यसको स्तनलाई हात लगाउँदैनथ्यो । साएबः त्यो पशु जसलाई उनीहरूले मूर्तिहरूको नाममा छाडिदिन्थे उनीमाथि न सवारी गर्दथे न माल लाद्थे । जस्तै छाडा साँडे जसलाई हिन्दू धर्ममा नन्दी भन्दछन् त्यसैप्रकार छोड्दथे । वसीला-त्यो उँटनी जसबाट प्रथम पोथी जन्मन्थ्यो तथा पुनः दोस्रो पटक पनि पोथी हुन्थ्यो । (अर्थात् एक पोथी पश्चात दोस्रो पोथी भयो तथा कुनै नर (भाले) को जन्म नहुनुको कारण मध्यमा भेद भएन भने यस्ता उँटनीहरूलाई पनि मूर्तिहरूको नाममा स्वतन्त्र छाडिदिने गर्दथे तथा हाम-त्यो नर उँट हो, जसद्वारा त्यसका नसलबाट कैयन् उँट जन्मिसक्थे भने तिनलाई पनि मूर्तिहरूको नाममा छाडिदिन्थे, त्यसबाट पनि सवारी तथा भार वाहनको काम लिदैनथे तथा हामी पशु भन्थे । यस कथनमा यस हदीसको पनि वर्णन छ कि सर्वप्रथम मूर्तिहरूको नाममा पशु मुक्तिको काम अमर बिन आमिर खुज़ाईले गरे । नबी सल्लल्लाहु अलैहि वसल्लम भन्नुहुन्छ कि, "मैले त्यसलाई नरकमा आन्द्रा-भुँडीहरू तानिराखेको देखें ।" (सहीह बुख़ारी, तफ़सीर सूरः अल-मायदः) आयतमा भनिएको छ कि अल्लाह तआलाले यी पशुहरूलाई यस प्रकारले मुक्त गर्न अनुमति दिइएको छैन, किनभने उसले प्रत्येक दान-दक्षिणा तथा मनौती आफ्नो लागि विशेष गरेको छ । मूर्तिहरूको लागि भेट अथवा भाकल यो मूर्तिपूजकहरूको आफ्नो उपज हो ।

وَلٰكِنَّ الَّذِيْنَ كَفَرُوْا يَفْتَرُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ ۭ وَاَكْثَرُهُمْ لَا يَعْقِلُوْنَ ۝

काफिर (विश्वास रहित) अल्लाहमाथि झूठा आरोप लगाउँछन् तर उनीहरूमध्ये अधिकतर बुद्धिले काम लिंदैनन् ।

وَاِذَا قِيْلَ لَهُمْ تَعَالَوْا اِلٰى مَآ اَنْزَلَ اللّٰهُ وَاِلَى الرَّسُوْلِ قَالُوْا حَسْبُنَا مَا وَجَدْنَا عَلَيْهِ اٰبَاۗءَنَا ۭ اَوَلَوْ كَانَ اٰبَاۗؤُهُمْ لَا يَعْلَمُوْنَ شَيْـــًٔـا وَّلَا يَهْتَدُوْنَ ۝

(१०४) तथा जब उनीसित भनियो कि त्यस (पवित्र कुरआन) तथा रसूल (मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम) तिर जाउ त उनीहरूले भने कि जुन (रीति) मा हामीले आफ्ना पूर्वजहरूलाई पाएका छौं, त्यो हामीलाई पर्याप्त छ, यद्यपि तिनका पूर्वज केही नजान्ने रहेका हुन् तथा सही मार्गमा नरहेका हुन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا عَلَيْكُمْ اَنْفُسَكُمْ ۚ لَا يَضُرُّكُمْ مَّنْ ضَلَّ اِذَا اهْتَدَيْتُمْ ۭ اِلَى اللّٰهِ مَرْجِعُكُمْ جَمِيْعًا فَيُنَبِّئُكُمْ

(१०५) हे ईमानवालाहरू ! आफ्नो चिन्ता गर, जब तिमी सत्य-मार्गमा हिंडिराखेका छौ, त जो व्यक्ति विचलित हुन्छ, त्यसबाट तिम्रो कुनै हानि छैन ।[1] अल्लाहकै पासमा तिमी सबैलाई जानुपर्नेछ ।

मूर्ति तथा देवताहरूको नामबाट पशु मुक्ति, प्रसाद चढाउनु आज पनि मूर्तिपूजकहरूमा व्याप्त छ तथा केही मुसलमान भनाउँदा मानिसहरूमा पनि यो प्रचलित छ । (اعاذنا الله منه)

[1]केही मानिसहरूको मस्तिष्कमा प्रत्येक शब्दहरूबाट यो शंका उत्पन्न भयो कि आफ्नो सुधार गरियो भने पर्याप्त छ । सत्कर्महरूको आदेश दिनु तथा कु-कर्महरूबाट रोक्नु आवश्यक छैन, परन्तु यो अर्थ सही छैन । सत्कर्मको आदेश दिनुको कर्तव्य पनि अत्याधिक महत्वपूर्ण छ । यदि एउटा मुसलमानले यो कर्तव्य छोडिदिइनेछ भने यसलाई त्याग गर्ने सत्य-मार्गमा कहिले रहनेछ ? जबकि कुरआनले ( إذا اهتديم ) (जब तिमी स्वयं मार्गदर्शनमा हिंडिराखेका छौ) को प्रतिबन्धबाट प्रतिबन्धित गरिदिएको छ । यसकारण जब आदरणीय अबूबक्र सिद्दीक (रजी अल्लाहु अन्हु) को ज्ञानमा यो कुरा आयो त उहाँले भन्नुभयो, मानिसहरू ! तिमी आयतलाई गलत स्थानमा प्रयोग गरिराखेका छौ, मैले नबी सल्लल्लाहु अलैहि वसल्लमले भनिराखेको सुनेको छु कि, "जब मानिसहरू नराम्रो भइराखेको देख्छन् तथा त्यसलाई परिवर्तन गर्ने प्रयत्न गर्दैनन् भने निकट छ कि अल्लाह तआला आफ्ना यातनाहरूको पकडमा लिइहालोस् ।"(मुसनद अहमद भाग १, पृष्ठ-५ तिर्मिजी संख्या २१७८ अबू दाऊद संख्या ४३३८) यसकारण आयतको सही अर्थ यो हो कि तिमीले सम्झाए उपरान्त यदि मानिसहरू पुण्यको मार्ग अपनाउँदैनन् अथवा नराम्रो कुराबाट रोकिंदैनन् भने तिम्रो लागि यो हानिकारक छैन, जबकि तिमी स्वयं पुण्यमा दृढ स्थिर तथा नराम्रो कुराबाट टाढा रहन्छौ । तर एक अवस्थामा राम्रो कुरोको आदेश दिनु तथा नराम्रो कुराबाट रोक्नु त्याग दिनु उचित छ जब कुनै व्यक्ति आफूभित्र त्यो शक्ति पाउँदैन

بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿١٠٥﴾

अनि त्यसले तिमी सबैलाई भनिदिनेछ जे-जति तिमी गर्दै आइरहेका हुनेछौ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا شَهَادَةُ بَيْنِكُمْ إِذَا حَضَرَ أَحَدَكُمُ الْمَوْتُ حِينَ الْوَصِيَّةِ اثْنَانِ ذَوَا عَدْلٍ مِّنكُمْ أَوْ آخَرَانِ مِنْ غَيْرِكُمْ إِنْ أَنتُمْ ضَرَبْتُمْ فِي الْأَرْضِ فَأَصَابَتْكُم مُّصِيبَةُ الْمَوْتِ ۚ تَحْبِسُونَهُمَا مِن بَعْدِ الصَّلَاةِ فَيُقْسِمَانِ بِاللَّهِ إِنِ ارْتَبْتُمْ لَا نَشْتَرِي بِهِ ثَمَنًا وَلَوْ كَانَ ذَا قُرْبَىٰ ۙ وَلَا نَكْتُمُ شَهَادَةَ اللَّهِ إِنَّا إِذًا لَّمِنَ الْآثِمِينَ ﴿١٠٦﴾

(१०६) हे निष्ठावानहरू ! जब तिमीमध्ये कसैको निधनको समय छ भने वसीयत (रिक्थदान) को समय तिमीमध्येबाट दुई विश्वस्त व्यक्तिलाई साक्षी हुनुपर्छ[1] अथवा तिमी बाहेक दुई अन्यलाई यदि तिमी धर्तीमा यात्रा गरिराखेका छौ तथा तिमीमाथि मृत्युको विपदा आइपुगोस्,[2] (शंकाको दशामा) तिमी दुबै (साक्षीहरू) लाई (अपरान्ह) को नमाज़ पश्चात रोक्नेछौ, अनि दुबै अल्लाहको शपथ लिनेछन् कि हामी यस (साक्ष्य) को सट्टा कुनै मूल्य लिन चाहदैनौं[3] यद्यपि त्यो निकटवर्ती होस् तथा हामी अल्लाहको साक्ष्य

तथा त्यसबाट त्यसको जीवनलाई खतरा होस् । यस अवस्थामा (فإن لم يستطع فبقلبه و ذالك أضعف الايمان) (जब तिम्रो शक्ति यो आज्ञा दिंदैन तब हृदयले त्यसलाई नराम्रो मान तथा यो कमजोर ईमानको प्रमाण हो) को आधारमा यसको स्थान छ । आयत पनि यसै अवस्थाको लागि समर्थन दिन्छ ।

[1]"तिमीमध्येबाट होस्" को अभिप्राय केहीले यो लिएका छन् कि मुसलमानहरू मध्येबाट होउन् तथा केहीले भनेका छन् कि (موصي) (उत्तरदान कर्ता) को जातिका होऊन् । यसैप्रकार ﴿أَوْ آخَرَانِ مِنْ غَيْرِكُمْ﴾ मा दुबै भाव हुनेछन् अर्थात् (من غيركم) बाट तात्पर्य जो मुसलमान छैनन् (अहले किताब) हुनेछन् अथवा उत्तरदानकर्ताको जातिका अतिरिक्त अन्य जातिबाट ।

[2]अर्थात् यात्रामा यस्तो रोग हुन्छ जसबाट बाँच्ने सम्भावना हुँदैन त त्यो यात्रामा दुई न्यायकारी साक्षी बनाएर जे वसीयत (परिस्थिति) गर्न चाहन्छ, गरिदेओस् ।

[3]यदि मर्ने व्यक्तिको उत्तराधिकारीलाई यो सन्देह हुन्छ कि साक्षीहरूले विश्वासघात एवं परिवर्तन गरेका छन्, त त्यो नमाज़ पश्चात अर्थात् मानिसहरूको उपस्थितिमा उनीसित सौगन्ध लिइयोस् तथा उनी कसम खाएर भनून् कि हामी सौगन्धको सट्टामा संसारका कुनै लाभ प्राप्त गरिराखेका छैनौं अर्थात् झूठा कसम खाइराखेका छैनौं ।

लुकाउन सक्दैनन्, यदि यस्तो गर्नेछौ भने हामी दोषी छौं ।

(१०७) अनि यदि थाहा हुन्छ कि ती दुबै (साक्षी) कुनै पापका पात्र भएका छन्[1] त जसमाथि पापको पात्र भएका छन्, उनीहरूमध्ये दुई निकटतम् सम्बन्धीहरू दुबै (साक्षीहरू) को ठाउँमा उभिनेछन्[2] तथा अल्लाहको शपथ ग्रहण गर्नेछन् कि हाम्रा साक्ष्यहरू यी दुबैका साक्ष्यहरूभन्दा अधिक सत्य छन् तथा हामीले अनृत (ज्यादती) गरेका छैनौं, हामी यस दशामा अत्याचारी हुनेछौं।

فَإِنْ عُثِرَ عَلَىٰٓ أَنَّهُمَا ٱسْتَحَقَّآ إِثْمًا فَـَٔاخَرَانِ يَقُومَانِ مَقَامَهُمَا مِنَ ٱلَّذِينَ ٱسْتَحَقَّ عَلَيْهِمُ ٱلْأَوْلَيَٰنِ فَيُقْسِمَانِ بِٱللَّهِ لَشَهَٰدَتُنَآ أَحَقُّ مِن شَهَٰدَتِهِمَا وَمَا ٱعْتَدَيْنَآ إِنَّآ إِذًا لَّمِنَ ٱلظَّٰلِمِينَ ﴿١٠٧﴾

(१०८) यो निकटतम् माध्यम हो कि उनीहरू सत्य साक्ष्य देऊन् अथवा उनीहरूलाई यो भय होस् कि शपथहरूको पश्चात पुन: शपथ उल्टो परिहाल्ने छ ।[3]

ذَٰلِكَ أَدْنَىٰٓ أَن يَأْتُوا۟ بِٱلشَّهَٰدَةِ عَلَىٰ وَجْهِهَآ أَوْ يَخَافُوٓا۟ أَن تُرَدَّ أَيْمَٰنٌۢ بَعْدَ أَيْمَٰنِهِمْ ۗ وَٱتَّقُوا۟ ٱللَّهَ وَٱسْمَعُوا۟ ۗ

---

[1]अर्थात् झूठो कसम खाएका छन् ।

[2](أوليان) यो (أولى) को दुई बचन हो । यसबाट तात्पर्य मृतक अर्थात् रिक्त दानकर्ताका समीपका दुई सम्बन्धी हुन् । (﴿مِنَ ٱلَّذِينَ ٱسْتَحَقَّ عَلَيْهِمُ﴾) को अभिप्राय जसमाथि पाप गरियो अर्थात् मिथ्या शपथ ग्रहण गर्नुको पाप गरेर धन हडप गरियो । (الأوليان) यो त (هُما) लुप्त विषयको विधेय छ अथवा (يَقُومَان) अथवा (آخَرَان) को सर्वनामको सट्टामा छ, अर्थात् दुई निकटवर्ती सम्बन्धीहरू उनका मिथ्या शपथहरूको प्रतिरोधमा आफ्नो शपथ दिनेछन् ।

[3]यो त्यस लाभको वर्णन हो जुन त्यस आदेशमा लुप्त छ, जसको वर्णन यहाँ गरिएको छ। त्यो यो कि यस विधिलाई अपनाउनुको कारण जसका समक्ष वसीयत (उत्तरदान) गरिएको थियो, सही गवाही दिनेछन् किनभने उनीहरूलाई यो भय हुनेछ कि यदि हामीले यसमा कुनै प्रकारको विश्वासघात अथवा परिवर्तन गऱ्यौं भने यो घटना स्वयं हामीमाथि आइपर्नेछ ।

यस आयतको अवतरणको घटनाको विषयमा बुदैल बिन अबू मरियमको घटनाको वर्णन हुन्छ कि उनी सीरिया व्यापारका लागि गएका थिए, त्यहाँ बिरामी तथा मर्नुको निकट पुगे, उनको पासमा सामान तथा चाँदीको एउटा प्याला थियो, जुन उनले दुई इसाईहरूलाई सुम्पेर आफ्ना सम्बन्धिहरूसम्म पुऱ्याउन वसीयत गरेर मरे । यी दुबै वसीयत सुन्ने जसलाई सामान तथा प्याला सुम्पिएको थियो, फर्केर आएपछि प्याला बेचेर पैसा

وَاللّٰهُ لَا يَهْدِى الْقَوْمَ الْفٰسِقِيْنَ ۝١٠٨

तथा अल्लाहसित तर्स र सुन कि अल्लाह अवज्ञाकारीहरूलाई मार्गदर्शन गर्दैन।

يَوْمَ يَجْمَعُ اللّٰهُ الرُّسُلَ فَيَقُوْلُ مَاذَآ اُجِبْتُمْ ۭ قَالُوْا لَا عِلْمَ لَنَا ۭ اِنَّكَ اَنْتَ عَلَّامُ الْغُيُوْبِ ۝١٠٩

(१०९) जुन (प्रलय) दिन अल्लाह (तआला) पैगम्बरहरू (उपदेशकहरू) लाई एकत्रित गर्नेछ, अनि सोध्नेछ कि तिमीलाई के उत्तर प्राप्त भएको थियो ? उनी उत्तर दिनेछन् हामीलाई केही थाहा छैन।[1] मात्र तिमी नै अप्रत्यक्षहरूको जानकार हौ।

اِذْ قَالَ اللّٰهُ يٰعِيْسَى ابْنَ مَرْيَمَ اذْكُرْ نِعْمَتِىْ عَلَيْكَ وَعَلٰى

(११०) जब अल्लाहले भन्नेछ कि ह मरियमका पुत्र ईसा ! आफू तथा आफ्नी आमा माथि मेरो

आपसमा बाँडे तथा शेष सामान उत्तराधिकारीहरूलाई पुऱ्याइदिए। सामानमा एउटा पत्र पनि थियो जसमा सामानको सूची थियो, जसअनुसार एउटा चाँदीको कचौरा थिएन। उनीसित जब भनियो त उनीहरूले झूठा कसम खाए, तर पछि थाहा भयो कि उनीहरूले अमूक सोनारलाई त्यो प्याला बेचिदिए। अत: उनीहरूले त्यस गैर मुस्लिमहरूको समक्ष कसम खाएर उनीहरूसित प्यालाको मूल्य प्राप्त गरे। यो वर्णन प्रमाणत:क्षीर्ण छ। (तिर्मिजी संख्या ३०५९ शोध अहमद शाकिर, मिस्र) तर एक-अर्काको प्रमाणबाट आदरणीय इब्ने अब्बासबाट पनि संक्षिप्तमा यो कथित छ, जसलाई हदीसका विशेषज्ञ अलबानीले सही भनेका छन्। (सहीह तिर्मिजी भाग ३, संख्या २४४९)

[1]नबीहरूसँग उनको वर्गले जे-जति गऱ्यो होला, त्यो अवश्य उनीहरूलाई याद होला। परन्तु उनी आफ्नो ज्ञानको इन्कार या त प्रलयको प्रचण्डता तथा अल्लाह तआलाको भय तथा महानताको कारण गरिदिनेछन्, अथवा यसको सम्बन्ध उनको मृत्युको उपरान्तको अवस्थासँग हुनेछ। यसको अतिरिक्त गुप्त कुराहरूको ज्ञान केवल अल्लाहलाई नै छ। यसकारण उनीहरूले भन्नेछन् कि, परोक्षज्ञ तिमी नै हौ। यसबाट ज्ञान भयो कि नबी तथा रसूललाई मात्रै छ। नबीहरूलाई जे-जति पनि ज्ञान हुन्छ, प्रथम त त्यसको सम्बन्ध ती नियमहरूसित हुन्छ जुन रिसालतको दायित्वको पूर्तिका लागि आवश्यक हुन्छन्। द्वितीय उनीसित पनि उनलाई वह्यीद्वारा नै सूचित गरिन्छन्। यद्यपि अन्तर्यामी त्यही हुन्छ जसलाई प्रत्येक वस्तुको ज्ञान स्वयं हुन्छ, न कि कसैले भने पश्चात कुनै कुराको ज्ञान प्राप्त हुन्छ, त्यसलाई अर्न्तयामी भनिदैन, न त्यो अन्तर्यामी नै हुन्छ।
( فافهم و تدبر ولا تكن من الغافلين ) (यसमा विचार गर निर्बोध नबन)

وَالِدَتِكَ ۘ إِذْ أَيَّدتُّكَ بِرُوحِ الْقُدُسِ تُكَلِّمُ النَّاسَ فِي الْمَهْدِ وَكَهْلًا ۖ وَإِذْ عَلَّمْتُكَ الْكِتَابَ وَالْحِكْمَةَ وَالتَّوْرَاةَ وَالْإِنجِيلَ ۖ وَإِذْ تَخْلُقُ مِنَ الطِّينِ كَهَيْئَةِ الطَّيْرِ بِإِذْنِي فَتَنفُخُ فِيهَا فَتَكُونُ طَيْرًا بِإِذْنِي ۖ وَتُبْرِئُ الْأَكْمَهَ وَالْأَبْرَصَ بِإِذْنِي ۖ وَإِذْ تُخْرِجُ الْمَوْتَىٰ بِإِذْنِي ۖ وَإِذْ كَفَفْتُ بَنِي إِسْرَائِيلَ عَنكَ إِذْ جِئْتَهُم بِالْبَيِّنَاتِ فَقَالَ الَّذِينَ كَفَرُوا مِنْهُمْ إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُّبِينٌ ﴿١١٠﴾

कृपालाई स्मरण गर जब मैले पवित्र आत्मा[१] (जिब्रील) द्वारा तिम्रो सहायता गरें । तिमी पिङ्मा तथा अर्धवैंशमा मानिसहरूसित कुरा गरिरहयौ तथा जब हामीले किताब एवं विज्ञान तथा तौरात एवं इंजीलको ज्ञान दियौं ।[२] तथा जब तिमी मेरो आज्ञाले पंक्षीको प्रतिमा माटोले बनाउँथ्यौं र त्यसमा फुक्दथ्यौं त मेरो आज्ञाले पंक्षी बनिहाल्थ्यो तथा तिमी मेरो आज्ञाले जन्मजात अन्धो एवं कोरी (कुष्ठ रोगी) लाई स्वस्थ गरिराखेका थियौ तथा मेरो आज्ञाले मृतकहरूलाई जीवित पारी निकाल्दथ्यौं[३] तथा जब मैले इस्राईलका पुत्रहरूलाई तिमीबाट रोकिराखें जब तिमी उनको पासमा चमत्कार ल्यायौ[४] त उनीहरूसित काफ़िरहरू (विश्वासहीनहरू) ले भने कि यो मात्र खुल्ला जादू हो ।[५]

---

[१]यसबाट तात्पर्य आदरणीय जिब्रील हुन्, जस्तो कि सूरः अल-बकरः को आयत संख्या ८७ मा उल्लेख भयो ।

[२]यसको स्पष्टीकरण सूरः आले इमरानको आयत संख्या ४८ मा उल्लेख भइसकेको छ।

[३]यी चमत्कारहरूका वर्णन पनि उपरोक्त सूरः को आयत संख्या ४९ मा उल्लेख भइसकेको छ ।

[४]यो त्यस षडयन्त्रतिरको संकेत हो जुन यहूदीहरूले आदरणीय ईसाको हत्या गर्न तथा फाँसीमा झुण्ड्याउनको लागि बनाएका थिए, जसबाट सुरक्षित गरी अल्लाह तआलाले उनलाई आकाशमा उचाल्यो । हेर्नुस् व्याख्या सूरः आले-इमरान आयत संख्या ५४ ।

[५]प्रत्येक नबीका विरोधी अल्लाह तआलाको आयत तथा चमत्कारलाई देखेर त्यसलाई जादू नै भन्दै आएका छन्, यद्यपि जादू त माया तन्त्र हो, जसको नबीहरूसित के सम्बन्ध हुन सक्दछ ? बरू नबीहरूको हातबाट प्रकट चमत्कार सर्वशक्तिमान अल्लाह तआलाको शक्ति तथा सामर्थ्यको द्योतक हुन्थे किनभने त्यो अल्लाहकै आदेशले उसको इच्छा तथा शक्तिले हुन्थ्यो । कुनै नबीको शक्तिमा यो थिएन कि अल्लाह तआलाको इच्छा तथा शक्ति बिना कुनै चमत्कार प्रदर्शित गर्न सकुन् । यसकारण हेर्नुस् आदरणीय ईसाको प्रत्येक चमत्कारको साथ अल्लाह तआलाले चार पटक भन्यो कि, "प्रत्येक चमत्कार मेरो आदेशले भएको छ यही कारण छ कि जब नबी सल्लल्लाहु अलैहि वसल्लमसित मक्काका

وَإِذْ أَوْحَيْتُ إِلَى الْحَوَارِيِّينَ أَنْ آمِنُوا بِي وَبِرَسُولِي قَالُوا آمَنَّا وَاشْهَدْ بِأَنَّنَا مُسْلِمُونَ ﴿١١١﴾

(१११) र जबकि मैले भक्तहरूलाई प्रेरणा दिएँ ।[1] कि तिमी म माथि तथा मेरा रसूलहरूमा विश्वास गर । उनीहरूले भने, हामीले ईमान ल्यायौं तथा तपाईं साक्षी रहनुस् कि हामी पूर्ण रूपमा आज्ञाकारी हौं ।

إِذْ قَالَ الْحَوَارِيُّونَ يَا عِيسَى ابْنَ مَرْيَمَ هَلْ يَسْتَطِيعُ رَبُّكَ أَنْ يُنَزِّلَ عَلَيْنَا مَائِدَةً مِنَ السَّمَاءِ قَالَ

(११२) स्मरण गर जब अनुयायीहरूले भने कि हे ईसा मरियमका पुत्र ! के तिम्रो स्वामी हामीमाथि आकाशबाट एउटा थाली अवतरित गर्नसक्छ ?[2]

---

मूर्तिपूजकहरूले विभिन्न चमत्कार देखाउन माँग गरे जसको विवरण सूरः बनी-इस्राईलको आयत संख्या ९१ देखि ९३ सम्ममा वर्णित भइसकेको छ, त त्यसको उत्तरमा नबी सल्लाहु अलैहि वसल्लमले भन्नुभयो ।

﴿سُبْحَانَ رَبِّي هَلْ كُنْتُ إِلَّا بَشَرًا رَسُولًا﴾

"मेरो प्रभु पवित्र छ (अर्थात् त्यो त यस क्षीणताबाट विहीन छ कि त्यसले यो चमत्कार देखाउन नसकोस्, त्यो त देखाउन सक्छ, परन्तु त्यसको इच्छा त्यसको अनुरूप छ अथवा कहिले अनुरूप हुनेछ ? यसको ज्ञान उसैलाई छ त्यसैको अनुसार निर्णय गर्दछ) परन्तु म त केवल मानव पुरूष तथा रसूल (सन्देष्टा) हुँ ।"

अर्थात् म भित्र यो चमत्कार देखाउन आफ्नो शक्ति छैन । अतः नबीहरूको चमत्कारको जादूसित कुनै सम्बन्ध छैन । यदि यस्तो भएको भए जादूगरले त्यसलाई भंग गरिदिन्थे । परन्तु आदरणीय मूसाको घटनाबाट सिद्ध हुन्छ कि संसारका एकत्रित ठूला-ठूला जादूगर मूसाको चमत्कारको काट् गर्न सकेनन् तथा जब उनलाई जादू तथा चमत्कारको अन्तर स्पष्टरूपले ज्ञात भयो तब उनी मुसलमान भए ।

[1]"हवारी" सित तात्पर्य आदरणीय ईसाका ती अनुयायी हुन्, जो उनीप्रति विश्वास गरे तथा उनका सहचर एवं सहायक बने । उनीहरूको संख्या १२ भनिन्छ, यहाँ "वह्यी" सित तात्पर्य त्यो प्रकाशना होइन जुन स्वर्गदूतद्वारा ईशदूतहरूमाथि अवतरित हुन्थ्यो बरू "मनमा बसाल्ने" को अर्थमा छ जुन अल्लाहको तर्फबाट केही मानिसहरूको मनमा उत्पन्न गरिन्छ । जस्तै आदरणीय मूसाकी आमा तथा आदरणीय मरियाममा यसै प्रकारको मनोभावना उत्पन्न गरियो । यसबाट विदित भयो कि जसले "वह्यी" को शब्दले मूसाकी आमा तथा मरियमलाई ईशदूत मानेका छन् त्यो सही छैन । यसकारण कि यसको अर्थ मनमा भावना उत्पन्न गर्नु हो । यसैप्रकार यहाँ हवारीहरूको ईशदूत हुने अर्थ होइन ।

[2]माइदः यस्तो भाँडा (तबक, सीनी, प्लेट अथवा ट्रे) लाई भनिन्छ जसमा खाना हुन्छ । यसकारण खाने स्थानलाई पनि अनुवाद गरिन्छ किनभने त्यसमा पनि खाना राखिन्छ ।

اتَّقُوا اللّٰهَ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ﴿١١٢﴾

उसले (ईसाले) भन्यो यदि तिमी विश्वास गर्छौ भने अल्लाहसित तर्स ।[1]

قَالُوْا نُرِيْدُ اَنْ نَّاْكُلَ مِنْهَا وَتَطْمَىِٕنَّ قُلُوْبُنَا وَنَعْلَمَ اَنْ قَدْ صَدَقْتَنَا وَنَكُوْنَ عَلَيْهَا مِنَ الشّٰهِدِيْنَ ﴿١١٣﴾

(११३) उनीहरूले भने कि हामीहरू चाहन्छौं कि त्यसबाट खाऔं तथा हाम्रा हृदयलाई सन्तोष पुगोस् तथा हामीलाई विश्वास होस् कि तपाईंले हामीसित सत्य भन्नुभयो र हामी त्यसमाथि साक्षी रहौं ।

قَالَ عِيْسَى ابْنُ مَرْيَمَ اللّٰهُمَّ رَبَّنَآ اَنْزِلْ عَلَيْنَا مَآىِٕدَةً مِّنَ السَّمَآءِ تَكُوْنُ لَنَا عِيْدًا لِّاَوَّلِنَا وَاٰخِرِنَا وَاٰيَةً مِّنْكَ وَارْزُقْنَا وَاَنْتَ

(११४) मरियमका पुत्र ईसाले भने, हे अल्लाह ! हामीमाथि आकाशबाट एउटा भरिएको थाल पठाइदेउ जो हामी मध्येबाट प्रथम एवंम अन्त्यको लागि प्रसन्न उत्सव बनोस्[2] तथा तिम्रो तर्फबाट एउटा चिन्ह होस् तथा हामीलाई

सूरःको नाम पनि यसैकारणले छ कि यसमा यसको वर्णन छ । हवारीहरूले आफ्ना हृदयको सन्तोषका लागि यो माँग गरेका थिए, जुनप्रकारले आदरणीय इब्राहीमले मृतकहरूलाई जीवित पार्नुको प्रदर्शनको माग गर्नुभएको थियो ।

[1]अर्थात् यो प्रश्न नगर किनभने सम्भव छ यो तिम्रो परीक्षाको कारण बनोस् किनभने इच्छित चमत्कारको प्रदर्शनको पश्चात त्यसबाट इन्कार त्यस समुदायको ईमानको कमजोरीलाई प्रदर्शित गरिदिनेछ, जुन यातनाको कारण बन्न सक्दछ । यसकारण ईसा अलैहिस्सलामले उनीहरूलाई रोक्नुभयो तथा अल्लाहसित तर्साउनु भयो ।

[2]इस्लामी धर्म विधानमा ईदको प्रयोजन यो होइन कि त्यो राष्ट्रिय उत्सवको एक दिन हो जसमा नैतिक बन्धन तथा धर्म विधानहरूलाई भङ्ग गर्दै अनुचित प्रसन्नता एवं हर्षोल्लासको प्रदर्शन गरियोस्, दीपहरू बालियून्, आमोद-प्रमोदहरू मनाइयून्, जस्तो कि वर्तमान युगमा यसको यही अर्थ बुझिन्छ तथा सो अनुसार उत्सव मनाइन्छ । अपितु आकाशीय धर्मविधानमा यो एउटा धार्मिक उत्सव हुन्छ जसको महत्वपूर्ण उद्देश्य यो हुन्छ कि पूरा समुदाय एकसाथ मिलेर अल्लाहको कृतज्ञता व्यक्त गरोस् तथा त्यसको महिमा एवं प्रशंसाको वर्णन गरोस् । यहाँ पनि आदरणीय ईसाले यस दिनको उत्सव (ईद) बनाउनुको जुन इच्छा गर्नुभयो यसबाट उनको प्रयोजन यही छ कि हामी तिम्रो महिमा, प्रशंसा एवं बडाइको गुणगान गरौं । केही धर्ममा मनमानी विचारहरूलाई धर्मसिद्ध गर्ने ईदे-मायदालाई ईदे मिलादको औचित्यको तर्क बनाउँछन् । यद्यपि यो घटना हाम्रो धार्मिक नियमभन्दा पूर्वको हो । यदि यसलाई इस्लाममा स्थाई राख्ने भए यसलाई स्पष्ट गरिन्थ्यो । दोस्रो यो कि पैग़म्बरको मुखबाट ईद बनाउने इच्छाको प्रदर्शन भएको थियो तथा पैग़म्बर पनि अल्लाहको आदेशले धार्मिक नियमहरूको वर्णन गर्न अधिकारी हुन्छ । तेस्रो ईदको भावार्थ

خَيْرُ الرّٰزِقِيْنَ ﴿١١٤﴾

आहार प्रदान गर । तिमी उत्तम जीविका दिनेवाला हौ ।

قَالَ اللّٰهُ اِنِّيْ مُنَزِّلُهَا عَلَيْكُمْ ۚ فَمَنْ يَّكْفُرْ بَعْدُ مِنْكُمْ فَاِنِّيْۤ اُعَذِّبُهٗ عَذَابًا لَّاۤ اُعَذِّبُهٗۤ اَحَدًا مِّنَ الْعٰلَمِيْنَ ﴿١١٥﴾

(११५) अल्लाह (तआ़ला) ले भन्यो कि म त्यो भोजन तिमीहरूको निम्ति उतार्ने छु, अनि तिमीमध्येबाट जुन व्यक्ति त्यसपछि कुफ्र गर्नेछ, त म उसलाई यस्तो दण्ड दिनेछु कि त्यो दण्ड म सम्पूर्ण संसारमा कसैलाई दिनेछैन ।[1]

وَاِذْ قَالَ اللّٰهُ يٰعِيْسَى ابْنَ مَرْيَمَ ءَاَنْتَ قُلْتَ لِلنَّاسِ اتَّخِذُوْنِيْ وَاُمِّيَ اِلٰهَيْنِ مِنْ دُوْنِ اللّٰهِ ۗ قَالَ سُبْحٰنَكَ مَا يَكُوْنُ لِيْۤ اَنْ اَقُوْلَ

(११६) तथा त्यो समय पनि स्मरणीय छ जबकि अल्लाह (तआ़ला) भन्नेछ कि हे ईसा पुत्र मरियम, के तिमीले उनीहरूसित भनेको थियौ कि मलाई र मेरी मातालाई अल्लाहको अतिरिक्त

तथा अर्थ पनि त्यही हुन्थ्यो जुन उपरोक्त वर्णित पंक्तिहरूमा वर्णित गरिएको छ । जबकि ईद मीलादमा यी सबै कुराको समावेश छैन । इस्लाममा केवल दुईटा ईदहरू छन् जसलाई इस्लामले निर्धारित गरेको छ, ईदुल फित्र तथा ईदुल्अज़्हा, यिनको अतिरिक्त कुनै तेस्रो ईद छैन ।

[1]यो माइदः (भोजनको थाल) आकाशबाट उत्र्यो अथवा होइन, यस सन्दर्भमा कुनै निरन्तर स्पष्ट हदीस पाइँदैन । अधिकतर विद्वान (इमाम शौकानी तथा इमाम इब्ने ज़रीर तबरी सहित) यसको अवतरणको पक्षमा छन् तथा उनको तर्क कुर्आनको शब्द (﴿إِنِّي مُنَزِّلُهَا عَلَيْكُمْ﴾) सित छ कि अल्लाहको वचन हो जुन निःसन्देह सत्य छ। परन्तु यसलाई अल्लाह तआ़लाको तर्फबाट पूर्ण विश्वासका साथ वचन भन्नु यसकारण उचित लाग्दैन कि अर्को शब्द (فمن يكفر) यस वचनलाई प्रतिबन्धित हुनलाई प्रदर्शित गर्दछ। यसकारण अन्य विद्वान भन्छन् कि जब अल्लाह तआ़ला वचनसँग यो प्रतिवन्ध सुने त उनीहरूले उत्तर दिए कि त्यसो भए हामीलाई यसप्रकार आवश्यकता छैन । जसपश्चात त्यो उत्रेन । इमाम इब्ने कसीरले यी तर्कका प्रमाणलाई जुन इमाम मुजाहिद हसन बसरीसँग सम्बन्धित छ, सही मानेका छन् । यसको अतिरिक्त यो भनेछन् कि यी तर्कहरूको पुष्टि यस कुराबाट पनि हुन्छ कि माइदःको अवतरणको कुनै प्रसिद्धि इसाईहरूमा छन् न उनका पुस्तकहरूमा लिखित छ । किनभने यदि यो उत्रेको नभए त्यसलाई उनीकहाँ अवश्य प्रसिद्ध गरिन्थ्यो तथा किताबहरूमा पनि त अधिकभन्दा अधिक अथवा कमभन्दा कम केही त लिखित हुनुपर्थ्यो । (والله أعلم بالصواب)

مَا لَيْسَ لِي بِحَقٍّ ۚ إِن كُنتُ قُلْتُهُ فَقَدْ عَلِمْتَهُ ۚ تَعْلَمُ مَا فِي نَفْسِي وَلَا أَعْلَمُ مَا فِي نَفْسِكَ ۚ إِنَّكَ أَنتَ عَلَّامُ الْغُيُوبِ ﴿١١٦﴾

माबूद (प्रभु) बनाउनु ?[१] ईसाले निवेदन गर्नुहुनेछ कि म त तिमीलाई सर्वगुणले युक्त (पवित्र) ठान्दछु, मलाई कुन प्रकारले यो कुरा शोभा दिन्थ्यो कि म यस्तो कुरा भन्थे जसलाई भन्नु मलाई कुनै अधिकार छैन, यदि मैले भनेको भए तिमीलाई त्यसको ज्ञान होला । तिमी त मेरो हृदयको कुरा जान्दछौ । म तिम्रो स्वयंममा जे-जति छ, त्यसलाई जान्दिन ।[२] मात्र तिमी नै परोक्षहरूको जानकार हौ ।

مَا قُلْتُ لَهُمْ إِلَّا مَا أَمَرْتَنِي بِهِ أَنِ اعْبُدُوا اللَّهَ رَبِّي وَرَبَّكُمْ ۚ وَكُنتُ عَلَيْهِمْ شَهِيدًا مَّا دُمْتُ فِيهِمْ ۖ فَلَمَّا تَوَفَّيْتَنِي كُنتَ أَنتَ

(११७) मैले उनीहरूसित मात्र त्यही भने जसबार तिमील मलाई आज्ञा दियौ कि आफ्नो पालक तथा मेरो पालक अल्लाहको आराधना गर[३] तथा जबसम्म म उनीहरूबीच रहें, उनीहरूमाथि साक्षी रहें तथा जब तिमीले

[१]यो प्रश्न केयामतको दिन हुनेछ । उद्देश्य यसबाट अल्लाहलाई छाडी कुनै अन्यलाई ईष्टदेव बनाउनेहरूलाई सतर्क गर्नु हो कि जसलाई तिमी ईष्टदेव तथा कष्ट निवारक ठान्थ्यौ त्यो त स्वयं अल्लाहको सदनमा उत्तरदायी छ ।

दोस्रो कुरो यो ज्ञान भयो कि इसाईहरूले आदरणीय मसीहसँग आदरणीय मरियमलाई ईष्टदेव (पूज्य) वनाएका छन् ।

तेस्रो कुरो यो ज्ञान भयो कि अल्लाहका अतिरिक्त ईष्टदेव त्यही होइन, जसलाई मूर्तिपूजकहरूले पत्थर अथवा काठहरूको कुनै रूप बनाएर तिनका पूजा गरे, जुनप्रकार आजकल कब्र पूजक विद्वान आफ्नो जनतालाई यो बताएर धोका दिइराखेका छन् । अपितु अल्लाहका ती भक्त पनि अल्लाहका अतिरिक्त ईष्टदेवको परिधिमा आउँछन् जसलाई मानिसहरूले कुनै पनि रूपमा इबादत गरे । जस्तै आदरणीय ईसा तथा मरियमलाई इसाईहरूले गरे ।

[२]आदरणीय ईसा अलैहिस्सलाम कति स्पष्ट शब्दहरूमा आफ्नो अन्तर्यामी हुने कुराको इंकार गरिराखेका छन् ।

[३]आदरणीय ईसाले एकेश्वरवाद तथा परमेश्वरको पूजाको आमन्त्रण दुग्धपानकै आयुमा दिए । जस्तो सूर: मरियममा छ तथा वयस्क अवस्थामा पनि ।

الرَّقِيْبَ عَلَيْهِمْ ۚ وَاَنْتَ عَلٰى كُلِّ شَيْءٍ شَهِيْدٌ ﴿١١٧﴾

मलाई माथि उठायौ त तिमी नै उनको संरक्षक थियौ[1] तथा तिमी प्रत्येक विषयमा साक्षी छौ ।

اِنْ تُعَذِّبْهُمْ فَاِنَّهُمْ عِبَادُكَ ۚ وَاِنْ تَغْفِرْ لَهُمْ فَاِنَّكَ اَنْتَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿١١٨﴾

(११८) तिमी यदि यिनीहरूलाई दण्ड दिन्छौ भने यिनी तिम्रा भक्त हुन् तथा यदि तिमी यिनीहरूलाई क्षमा गरिदिन्छौ भने तिमी प्रभावी विज्ञाता हौ ।[2]

[1](توفيتنى) को अर्थ हो कि जब तिमीले मलाई संसारबाट उठायौ जस्तो कि यसको विस्तृत वर्णन सूर: आले-इमरानको आयत संख्या ५५ मा भइसकेको छ । यसबाट यो पनि ज्ञान भयो कि पैग़म्बरहरू (सन्देष्टाहरू) लाई मात्र त्यति नै ज्ञान हुन्छ जति अल्लाहको तर्फबाट उनीहरूलाई प्रदान गरिन्छ अथवा जसको दर्शन उनी आफ्नो जीवनकालमा आफ्नै आँखाहरूले गर्दछन् । यिनका अतिरिक्त उनीहरूलाई कुनै प्रकारको ज्ञान हुन्छ । जबकि अन्तर्यामी त्यो हुन्छ जसलाई कसैले नभने पनि स्वयं प्रत्येक कुराको ज्ञान भइहाल्छ तथा उसको ज्ञान आदिदेखि अन्तसम्मलाई घेरेको होस् । यो ज्ञानको विशेषता अल्लाहको अतिरिक्त कसैलाई छैन । यसकारण अन्तर्यामी मात्र अल्लाह नै छ । त्यसको अतिरिक्त कोही अन्तर्यामी छैन । हदीसमा उल्लेख छ कि प्रलय स्थानमा जब नबी सल्लल्लाहु अलैहि वसल्लमतिर उहाँका केही अनुयायीहरू आउन थाल्नेछन् भने फरिश्ताहरू समातेर उनलाई अर्केतिर लग्नेछन् । उहाँ सल्लल्लाहु अलैहि वसल्लम भन्नुहुनेछ कि उनलाई आउनदेउ, यी हाम्रा अनुयायी हुन् । फरिश्ताहरूले उहाँलाई भन्नेछन् ।

اِنَّكَ لا تدري مَا أَحْدَثُوا بعدك

"(हे मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम !) तपाईंलाई थाहा छैन कि तपाईं सल्लल्लाहु अलैहि वसल्लमका पश्चात उनीहरूले धर्ममा के-के आधुनिकीकरण उत्पन्न गरे ।"

जब उहाँ सल्लल्लाहु अलैहि वसल्लम यो सुन्नेछन् त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नु हुनेछ कि म पनि त्यसै समय यही भन्नेछु जुन अल्लाहका भक्त (आदरणीय ईसा) ले भने

﴿ وَكُنْتُ عَلَيْهِمْ شَهِيْدًا مَّا دُمْتُ فِيْهِمْ ۚ فَلَمَّا تَوَفَّيْتَنِيْ كُنْتَ اَنْتَ الرَّقِيْبَ عَلَيْهِمْ ﴾

(सहीह बुख़ारी तफ़सीर सूर: अल-माइद: व किताबुल अम्बिया, सहीह मुस्लिम बाब फनाईद्दुनियाँ व बयानुल हश्र यौमल क़ियाम:) ।

[2]अर्थ यो हो कि हे अल्लाह यिनको निर्णय अब तिमीमाथि छ । यो यसकारण कि तिमी (فعال لما يريد) हौ (जे चाहन्छौ, गर्न सक्छौ) तथा तपाईं कोही सोध्ने पनि छैन ।

(﴿ لَا يُسْئَلُ عَمَّا يَفْعَلُ وَهُمْ يُسْئَلُوْنَ ﴾)

(११९) अल्लाहले (तआला) भन्नेछ कि यो त्यो दिन हो जब सत्यवादीहरूका सत्य उनको लागि लाभप्रद हुनेछ ।[1] उनीहरूले बाग पाउनेछन्, जसमा तल नहरहरू बगिराखेका हुनेछन्, जसमा उनी चिरस्थाई रूपले रहनेछन् । अल्लाह तआला उनीसित प्रसन्न तथा उनी अल्लाहसित प्रसन्न छन् । यो धेरै ठूलो सफलता हो ।

قَالَ اللّٰهُ هٰذَا يَوْمُ يَنْفَعُ الصّٰدِقِيْنَ صِدْقُهُمْ ۭ لَهُمْ جَنّٰتٌ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۭ رَضِيَ اللّٰهُ عَنْهُمْ وَرَضُوْا عَنْهُ ۭ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿١١٩﴾

(१२०) अल्लाहकै राज्य हो आकाशहरूको तथा धर्तीको तथा ती कुराको जुन तिनमा उपस्थित छन् तथा त्यो प्रत्येक वस्तुमाथि सामर्थ्य राख्दछ ।

لِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا فِيْهِنَّ ۭ وَهُوَ عَلٰي كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٢٠﴾

## सूरतुल् अन्आम–६

سُوْرَةُ الْاَنْعَامِ

सूरः अनआम मक्कामा अवतरित भएको तथा यसमा एक सय पैंसट्ठी आयतहरू एवं बीस रूकूअ छन् ।

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अति कृपालु तथा अति दयालु छ ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

"अल्लाह जे पनि गर्दछ त्यसको पकड हुनेछैन, मानिसहरूको उनका कर्महरूमा पकड हुनेछ ।" (सूरः अल-अम्बिया-२३)

अर्थात् आयतमा अल्लाहका समक्ष भक्तहरूको शक्तिहीनता तथा असहाय हुने कुरोको प्रदर्शन छ, तथा अल्लाहको महिमा, विशेषता तथा गुणहरूको वर्णन छ । तथा यी दुवैको माध्यमबाट क्षमाको प्रार्थना पनि गरिंदैछ । अल्लाह नै महिमा योग्य छ । कस्तो विचित्र तथा प्रभावी आयत छ । यसकारण हदीसमा उल्लेख छ कि एक रात नबी सल्लल्लाहु अलैहि वसल्लममाथि स्वेच्छा नमाज़मा यो आयत पढ्दाखेरि यस्तो अवस्था भयो कि पटक-पटक प्रत्येक रकातमा यही आयत पढिराख्नु भयो यहाँसम्मकि प्रातः भइयो । (मुसनद अहमद-भाग-५, पृष्ठ-१४९)

[1]आदरणीय इब्ने अब्बासले यसको अर्थ यो भन्नुभएको छ । (ينفع الموحدين توحيدهم) "त्यो दिन यस्तो हुनेछ कि केवल एकेश्वरवाद तथा एकेश्वरवादीलाई लाभ पुग्नेछ । अर्थात् मूर्तिपूजकहरूको क्षमा तथा मोक्षको प्रश्न नै उठ्दैन ।"

(१) सबै प्रशंसा त्यस अल्लाहको लागि छ जसले आकाशहरू एवं पृथ्वीको रचना गऱ्यो एवं अन्धकार तथा प्रकाशलाई बनायो,[१] तैपनि जो विश्वास गर्दैनन् (अन्यलाई) आफ्नो प्रभु समान मान्दछन् ।[२]

ٱلْحَمْدُ لِلَّهِ ٱلَّذِى خَلَقَ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ وَجَعَلَ ٱلظُّلُمَٰتِ وَٱلنُّورَ ۖ ثُمَّ ٱلَّذِينَ كَفَرُوا۟ بِرَبِّهِمْ يَعْدِلُونَ ①

(२) त्यसले तिमीलाई माटोले निर्माण गऱ्यो ।[३] अनि एक समय निर्धारित गऱ्यो ।[४] तथा एक निर्धारित समय उसित छ ।[५] तैपनि तिमी सन्देह गर्दछौ ।[६]

هُوَ ٱلَّذِى خَلَقَكُم مِّن طِينٍ ثُمَّ قَضَىٰٓ أَجَلًا ۖ وَأَجَلٌ مُّسَمًّى عِندَهُۥ ۖ ثُمَّ أَنتُمْ تَمْتَرُونَ ②

[१]जुल्मातसित रातको अन्धकार तथा नूरसित दिनको प्रकाश अथवा कुफ्र (अविश्वास) पछिको अन्धकार तथा ईमानको प्रकाश तात्पर्य हो । प्रकाश (नूर) को सापेक्ष अन्धकार (जुल्मात) लाई अरबी शब्दमा बुहवचन प्रयोग गरिएको छ, यसकारण कि जुल्मातका (प्रकाश) कैयन् कारण छन् तथा उनी कैयन् प्रकारका हुन्छन् । तथा नूर (प्रकाश) को वर्णन एक सामान्य रूपमा छ, जुन आफ्ना सबै भागहरूका साथ सम्मिलित छ । (फ़तहुल क़दीर) यो पनि हुनसक्छ किनभने मार्गदर्शन तथा ईमानको मार्ग एउटै छ, चार, पाँच अथवा कैयन छैनन्, यसकारण प्रकाशको एक वचन प्रयोग गरिएको छ ।

[२]अर्थात् त्यसका साथ अरुहरूलाई सम्मिलित गर्दछन् ।

[३]अर्थात् तिम्रा पिता आदम, जुन तिम्रो मूल वास्तविकता हो, तथा जसबाट तिमी सबै निस्केका छौ । यसको एक अन्य अर्थ यो पनि हुनसक्छ कि तिमी जुन भोजन तथा खाद्य पदार्थ खान्छौ, सबै धर्तीबाट उम्रन्छन् तथा तिनै खाद्य पदार्थहरूबाट वीर्य बन्दछ, जो माताको गर्भमा गई मनुष्यको रूप धारण गर्दछ । यसप्रकारले तिम्रो जन्म माटोबाट भएको हो ।

[४]अर्थात् मृत्युका समय ।

[५]अर्थात् अन्त दिवसको समयलाई मात्र अल्लाह जान्दछ । अर्थात् पहिला "अज़ल" शब्द प्रयोग गरिएको छ, त्यसको अर्थ जन्मदेखि मृत्युसम्म (आयु) हो । दोस्रो "अजलुन्मुस्सम्मा:" शब्दको अर्थ मृत्यु पश्चात देखि केयामत (प्रलयसम्म) संसारको आयु हो, तथा एक अन्य संसारको आयु हो, जसको पश्चात त्यो पतन तथा विनाशसित मिलेर समाप्त हुनेछ तथा एक अन्य संसार अर्थात् आख़िरतको जीवनको प्रारम्भ हुनेछ ।

[६]अर्थात् क़ेयामत (प्रलय) आउने विषयमा जुन प्रकारले क़ाफिर (अधर्मी) तथा मूर्तिपूजक भन्ने गर्थे कि जब हामी मरेर मिट्टी (माटो) मा मिसिहाल्थ्यौं त त्यसको पश्चात

وَهُوَ اللّٰهُ فِي السَّمٰوٰتِ وَفِي الْاَرْضِ ۭ يَعْلَمُ سِرَّكُمْ وَجَهْرَكُمْ وَيَعْلَمُ مَا تَكْسِبُوْنَ ③

(३) तथा त्यही अल्लाह छ, आकाशहरूमा एवं पृथ्वीमा, त्यो तिम्रा भेद एवं व्यक्तलाई जान्दछ तथा तिम्रा कृतिहरूबाट अवगत छ।[1]

وَمَا تَاْتِيْهِمْ مِّنْ اٰيَةٍ مِّنْ اٰيٰتِ رَبِّهِمْ اِلَّا كَانُوْا عَنْهَا مُعْرِضِيْنَ ④

(४) तथा उनीहरूको पासमा कुनै निशानी उनका प्रभुका निशानीहरू मध्येबाट आउँदैन, अपितु तिनी त्यसबाट मुख फर्काउँछन्।

فَقَدْ كَذَّبُوْا بِالْحَقِّ لَمَّا جَآءَهُمْ ۭ فَسَوْفَ يَاْتِيْهِمْ اَنْۢبٰۗؤُا مَا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ⑤

(५) उनीहरूले त्यस साँचो किताबलाई पनि झूठा भने जबकि त्यो उनको पासमा पुग्यो, त शीघ्र नै उनीहरूलाई सूचना प्राप्त हुनेछ त्यस कुराको जसको यिनीहरू उपहास गर्दथे।[2]

اَلَمْ يَرَوْا كَمْ اَهْلَكْنَا مِنْ قَبْلِهِمْ مِّنْ قَرْنٍ مَّكَّنّٰهُمْ فِي الْاَرْضِ مَا لَمْ نُمَكِّنْ لَّكُمْ وَاَرْسَلْنَا السَّمَاۗءَ

(६) के उनीहरूले देखेनन् कि हामीले उनीहरूभन्दा पूर्व (पहिले) कति गुटहरूलाई नष्ट गरिसकेका छौं जसलाई हामीले संसारमा यति शक्ति प्रदान गरेका थियौं।

पुन: हामीलाई कुन प्रकारले जीवित गरिने छ ? अल्लाह तआलाको आदेश भयो जसले तिमीलाई पहिलोपटक जन्म दियो, त्यही तिमीलाई पुन: जीवित गर्नेछ। (सूर: यासीन)

[1]अहले सुन्नत अर्थात् विगत धर्मात्माहरूको विश्वास छ कि अल्लाह तआला स्वयं त अर्शमाथि छ, जस्तो कि त्यो महिमा योग्य छ, परन्तु आफ्नो ज्ञानको आधारमा प्रत्येक स्थानमा छ, अर्थात् त्यसको ज्ञान तथा सूचनाको परिधिबाट कुनै कुरा पनि वाहिर छैन । तर केही गुटहरूका मानिसहरू यो भन्दछन् कि अल्लाह तआला अर्शमा होइन अपितु हरेक ठाउँमा छ तथा तिनी यस आयतबाट आफ्नो विश्वासको पुष्टि गर्दछन्। परन्तु यो विश्वास ठीक छैन, यो तर्क पनि ठीक छैन । आयतको अर्थ यो हो कि त्यो वास्तविक पूज्य जसलाई आकाशहरू तथा धर्तीमा अल्लाह भनेर पुकार्दछन् तथा आकाशहरू तथा धर्तीमा जसलाई ईश्वर मानिन्छ, त्यो अल्लाह तिम्रा लुकेका तथा स्पष्ट तथा जे-जति कर्म तिमी गर्दछौ, जबैलाई जान्दछ। (फ़तहुल क़दीर) यसका अन्य तर्क पनि प्रस्तुत गरिएका छन् जसलाई ज्ञानीहरूको व्याख्यामा देख्न सकिन्छ जस्तो तफ़सीर तबरी तथा इब्ने क़सीर आदि ।

[2]अर्थात् यस मुख फर्काउने तथा झुठलाउने कुरोको पाप उनीहरूलाई प्राप्त हुनेछ, त्यसबेला उनीहरूलाई आभास हुनेछ कि काश (यदि) हामीले त्यस साँचो किताबलाई नझुठ्लाएको भए तथा उपहास नगरेको भए (राम्रो हुने थियो)

عَلَيْهِم مِّدْرَارًا وَجَعَلْنَا الْأَنْهَارَ تَجْرِي مِن تَحْتِهِمْ فَأَهْلَكْنَاهُم بِذُنُوبِهِمْ وَأَنشَأْنَا مِن بَعْدِهِمْ قَرْنًا آخَرِينَ ⑥

जस्तो तिमीलाई पनि प्रदान गरेका थिएनौ तथा हामीले उनीमाथि मुसलधारे वर्षा गऱ्यौं तथा हामीले तिनका मुनिबाट नदीहरू बगायौं, अनि हामीले उनलाई उनका पापको कारण नष्ट गरिदियौं ।[1] तथा उनका पश्चात अन्य समुदायलाई सृष्टि गऱ्यौं ।[2]

وَلَوْ نَزَّلْنَا عَلَيْكَ كِتَابًا فِي قِرْطَاسٍ فَلَمَسُوهُ بِأَيْدِيهِمْ لَقَالَ الَّذِينَ كَفَرُوا إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُّبِينٌ ⑦

(७) तथा यदि हामीले कागजमा लेखिएको कुनै पत्र पनि तपाईंमाथि अवतरित गरेको भए अनि यिनीहरूले आफ्ना हातले छोएको भएपनि यी काफिरहरूले यही भन्थे कि यो स्पष्ट जादूबाहेक अरू केही पनि होइन ।[3]

[1]अर्थात् जब पापका कारण तिमीभन्दा पूर्वका समुदायहरूलाई हामीले नष्ट गरिसकेका छौं, जबकि उनी शक्तिमा तिमीभन्दा धेरै अधिक थिए तथा साधन तथा धनको बाहुल्य पनि तिम्राभन्दा अधिक थिए त तिमीलाई नष्ट गर्नु हाम्रो लागि के कठिन छ र ? यसबाट ज्ञात भयो कि कुनै समाजको भौतिक उन्नति तथा खुशहालीबाट यो बुझ्नु हुँदैन कि त्यो सफल तथा विजयी छ । यो अवसर तथा समय दिनुको ती अवस्थाहरू हुन् जुन परीक्षा लिनको लागि विभिन्न समुदायहरूलाई दिइन्छन् । परन्तु जब उनको समय पूरा हुन्छ, तब यो सम्पूर्ण उन्नति तथा खुशहाली उनीहरूलाई अल्लाहको प्रकोपबाट बचाउनमा सफल हुँदैन ।

[2]ताकि उनको पनि पछिल्ला समुदायहरूकै जस्तै परीक्षा लिइयोस् ।

[3]यो उनको हठधर्मी, कपट, द्वेष तथा ईर्ष्याको प्रदर्शन हो कि यो स्पष्ट कागज अल्लाहबाट लेखिएको पत्र यदि उनीहरू छोए पनि मान्नको लागि तयार हुने छैनन् तथा उनीहरू यसलाई जादूगरको खेल भन्नेछन् ।

﴿وَلَوْ فَتَحْنَا عَلَيْهِم بَابًا مِّنَ السَّمَاءِ فَظَلُّوا فِيهِ يَعْرُجُونَ ۞ لَقَالُوا إِنَّمَا سُكِّرَتْ أَبْصَارُنَا بَلْ نَحْنُ قَوْمٌ مَّسْحُورُونَ﴾

"यदि हामीले उनीहरूको लागि आकाशको कुनै ढोका खोलिदिउ र यिनीहरू त्यसमा चढ्न थालून्, तैपनि भन्नेछन् कि हाम्रा आँखा तिर्मिराएर नदेख्ने भएका छन्, अपितु हामीमाथि जादू गरिएको छ ।" (सूरः अल-हिज़र-१४ तथा १५)

﴿وَإِن يَرَوْا كِسْفًا مِّنَ السَّمَاءِ سَاقِطًا يَقُولُوا سَحَابٌ مَّرْكُومٌ﴾

وَقَالُوا لَوْلَآ اُنْزِلَ عَلَيْهِ مَلَكٌ ؕ وَلَوْ اَنْزَلْنَا مَلَكًا لَّقُضِيَ الْاَمْرُ ثُمَّ لَا يُنْظَرُوْنَ ﴿٨﴾

(८) तथा उनीहरूले भने कि तपाईंको लागि कुनै फरिश्ता (सुरः) किन अवतरित गरिएन र यदि हामीले फरिश्ता अवतरित गरिदिएको भए विषयको निर्णय गरिन्थ्यो अनि उनीहरूलाई अवसर दिइन्थ्यो ।[1]

"तथा यदि उनीहरू आकाशबाट खसिराखेको देख्छन् भने त भन्नेछन् कि पत्रमाथि पत्र बादलहरू हुन् ।" (सूरः अल-तूर-४४)

अर्थात् अल्लाहको प्रकोपको कुनै न कुनै कल्पना रच्नेछन् जसमा अल्लाहको अधिकार उनीहरूले स्वीकार गर्न नपरोस् । वास्तवमा सम्पूर्ण ब्रम्हाण्डमा जे-जति हुन्छ, त्यसमा अल्लाहको इच्छाको समावेश हुन्छ ।

[1]अल्लाहले मानव जातिको मार्गदर्शन गराउनको लागि, जति पनि अम्बिया तथा रसूल (सन्देशवाहक) पठायो, सबै मानव पुरूष नै थिए तथा प्रत्येक समुदयामा उनीहरूमध्येबाट एकलाई प्रकाशना तथा ईशवाणीबाट विभूषित गऱ्यो । यो यसकारण कि त्यो नभई सन्देष्टा मार्ग दर्शाउने काम पूरा गर्न सक्दैनथ्यो, उदाहरणका लागि यदि फरिश्ताहरू (स्वर्गदूत) लाई रसूल (सन्देष्टा) बनाएर पठाउँथ्यो भने मानवीय भाषामा वार्तालाप गर्नमा असमर्थ हुन्थ्यो । दोस्रो उनी मानवीय भावनाहरूबाट शून्य हुनुको कारण विभिन्न मानवीय परिस्थितिहरू एवं भावनाको प्रबोधमा असमर्थ हुन्थे । यस्तो दशामा मार्गदर्शनको कर्तव्य कुन प्रकार पूरा गर्न सक्दथे ? यसकारण अल्लाहको मानव जातिमाथि एउटा ठूलो उपकार छ कि उसले मानवलाई नै ईशदूत तथा सन्देशवाहक बनायो । जस्तो कि परमेश्वर (अल्लाह) पवित्र कुरआनमा यसको चर्चा एक उपकारको रूपमा गरिराखेको छ ।

﴿لَقَدْ مَنَّ اللّٰهُ عَلَى الْمُؤْمِنِيْنَ اِذْ بَعَثَ فِيْهِمْ رَسُوْلًا مِّنْ اَنْفُسِهِمْ﴾

"अल्लाह तआलाले ईमानवालाहरूमाथि उपकार गऱ्यो कि उनैको जातिबाट एउटा व्यक्तिलाई रसूल बनाएर पठायो ।" (सूरः आले इमरान-१६४)

तर पैगम्बरहरूको मनुष्य हुनु काफिरहरूको लागि आश्चर्यजनक छ । उनीहरू ठान्ने गरे कि रसूल मनुष्यहरूबाट होइन फरिश्ताहरूबाट हुनुपर्छ । अर्थात् उनका निकट मनुष्यको योग्य रिसालतको पदवी थिएन जस्तो कि आधुनिक बिदअतीहरू ठान्दछन् । (تشابهت قلوبهم) काफिर मूर्तिपूजक रसूलहरूको मनुष्य हुने कुरोबाट इन्कार गर्दैनथे किनभने उनी उनका पूरा परिवारसित परिचित थिए, परन्तु रिसालतलाई इन्कार गरिरहे । जबकि आजकलका बिदअती मानिसहरू रिसालतको इंकार गर्दैनन् परन्तु रिसालतको योग्य मनुष्यत्वलाई नबुझ्नुको कारण रसूलहरूको मनुष्य हुने कुरोबाट इन्कार गर्दछन् । अल्लाह तआलाको भनाइ छ कि यदि हामी मनुष्यको स्थानमा फरिश्ता पनि रसूल बनाएर पठाउँथ्यौं अथवा यस रसूल सल्लल्लाहु अलैहि वसल्लमको पुष्टिको लागि हामीले कुनै फरिश्ता पनि पठाए (जस्तो कि यहाँ यसै कुराको वर्णन गरिएको छ)

وَلَوْ جَعَلْنَٰهُ مَلَكًا لَّجَعَلْنَٰهُ رَجُلًا وَلَلَبَسْنَا عَلَيْهِم مَّا يَلْبِسُونَ ۝٩

(९) तथा यदि हामीले रसूललाई फरिश्ता बनाउँथ्यौ भने त्यसलाई पुरूष बनाउँथ्यौं तथा उनीमाथि त्यही सन्देह उत्पन्न गर्थ्यौं जुन सन्देह गरिराखेका छन् ।[1]

وَلَقَدِ اسْتُهْزِئَ بِرُسُلٍ مِّن قَبْلِكَ فَحَاقَ بِالَّذِينَ سَخِرُوا مِنْهُم مَّا كَانُوا بِهِ يَسْتَهْزِءُونَ ۝١٠

(१०) तपाईंभन्दा पूर्व धेरैजसो रसूलहरू (ईशदूतहरू) को उपहास गरियो, त जुन उपहास गरिराखेका थिए, उनको उपहासको दुष्परिणाम उनीमाथि आइपऱ्यो ।

قُلْ سِيرُوا فِي الْأَرْضِ ثُمَّ انظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِينَ ۝١١

(११) (तपाई) भनिदिनुस् कि अलि धर्तीमा हिंड्डुल गरेर हेर कि झुठ्लाउनेहरूको के परिणाम भयो ?

قُل لِّمَن مَّا فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۖ قُل لِّلَّهِ ۚ كَتَبَ عَلَىٰ نَفْسِهِ الرَّحْمَةَ ۚ لَيَجْمَعَنَّكُمْ إِلَىٰ يَوْمِ الْقِيَامَةِ لَا رَيْبَ فِيهِ ۚ الَّذِينَ خَسِرُوا أَنفُسَهُمْ

(१२) (तपाई) भनिदिनुस् कि जे-जति आकाशहरू तथा धर्तीमा छन्, यी सबैमाथि कसको स्वामित्व छ ? (तपाई) भनिदिनुस् सबैमाथि अल्लाहको स्वामित्व छ, अल्लाहले कृपा गर्नु आफूमाथि अनिवार्य गरिहालेको छ ।[2] तिमीलाई

तैपनि उनीहरू ईमान स्थापित गर्ने थिएनन् त बिना समय नदिइकन उनीहरूलाई नाश गरिदिन्थ्यो ।

[1]अर्थात् यदि हामी फरिश्तालाई नै रसूल बनाएर पठाउने निर्णय गर्थ्यौं भने स्पष्ट कुरा छ कि त्यो फरिश्ताको रूपमा आउन सक्दैनथ्यो किनभने यसप्रकारले मनुष्य त्यसवाट भयभीत हुन्थे तथा निकटता तथा घनिष्टता सृजना गर्नुको सट्टा टाढा भाग्थे । यसकारण आवश्यक थियो कि त्यसलाई मनुष्यको रूपमा पठाइयोस् । परन्तु तिम्रा यी नेता तैपनि यही सन्देह गर्दथे कि मनुष्य नै छ, जो यस समय पनि रसूललाई मनुष्यको रूपमा प्रस्तुत गरिराखेका छ, त फरिश्ताहरूलाई पठाउनुको के लाभ ?

[2]जुन प्रकार हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो जब अल्लाह तआलाले सृष्टिलाई पैदा गऱ्यो तव भने अर्शमाथि यो लेखिदियो إِنَّ رَحْمَتِي تَغْلِبُ غَضَبِي सहीह बुखारी कितावुत तौहीद व बदउल खलक र मुस्लिम किताबुल तौबा) निःसन्देह मेरो दया मेरो क्रोधमाथि प्रभावी छ । परन्तु यो दया प्रलयका दिन केवल ईमान भएकाहरूको लागि हुनेछ, काफिरहरूमाथि प्रभु अत्याधिक क्रोधित हुनेछ । यसको अर्थ यो हो कि संसारमा त्यसको कृपा तथा दया सामान्य रूपले सबैको लागि छ चाहे उनी ईमानवाला तथा काफिर, सत्कर्मी तथा कुकर्मी, आज्ञाकारी

فَهُمْ لَا يُؤْمِنُونَ ﴿١٢﴾

अल्लाह (तआ़ला) ले केयामतका दिन एकत्रित गर्नेछ, यसमा कुनै सन्देह छैन, जसले स्वयंलाई नष्ट गरेका छन्, तिनै ईमान स्थापित गर्ने छैनन् ।

وَلَهُ مَا سَكَنَ فِي اللَّيْلِ وَالنَّهَارِ ۚ وَهُوَ السَّمِيعُ الْعَلِيمُ ﴿١٣﴾

(१३) तथा जे-जति दिन रातमा निवास गर्दछन्, ती सबै अल्लाहकै हुन् तथा त्यो बडो सुन्ने एवं बडो जान्नेवाला छ ।

قُلْ أَغَيْرَ اللَّهِ أَتَّخِذُ وَلِيًّا فَاطِرِ السَّمَاوَاتِ وَالْأَرْضِ وَهُوَ يُطْعِمُ وَلَا يُطْعَمُ ۗ قُلْ إِنِّي أُمِرْتُ أَنْ أَكُونَ أَوَّلَ مَنْ أَسْلَمَ ۖ وَلَا تَكُونَنَّ مِنَ الْمُشْرِكِينَ ﴿١٤﴾

(१४) तपाईं भन्नुस् कि के म अल्लाह बाहेक अन्यलाई मित्र (स्वामी) बनाउँ[1] जो आकाशहरू एवं पृथ्वीको रचयिता हो तथा त्यसले खुवाउँछ खुवाइँदैन, तपाईं भन्नुस् कि मलाई आदेश दिइएको छ कि उनीहरूमा सर्वप्रथम रह, जसले (अल्लाहप्रति) आत्म-समर्पण गरे तथा मिश्रणवादीहरूमा कदापि न रह ।

तथा अवज्ञाकारी होउन् सबै त्यसबाट लाभान्वित भइराखेका छन् । अल्लाह तआ़ला कुनै पनि व्यक्तिको जीवनयापनको सामग्रीलाई प्राप्त गर्नका साधनलाई उसको अवहेलना एवं अवज्ञाकारीताको कारण बन्द गर्दैन, परन्तु उसको दयाको समानरूप केवल दुनिया (संसार) सम्म नै सीमित छ । आख़िरत (परलोक) मा जुनकि प्रतिफलको स्थान हो, त्यहाँ अल्लाहको न्यायको विशेषताको पूर्ण प्रदर्शन हुनेछ, जसको परिणाम स्वरूप ईमानवाला त्यसको कृपा तथा दयाको छत्र छायाँमा स्थान पाउनेछन् तथा क़ाफिर तथा उपद्रवी नरक़को स्थायी यातनाका भोगी हुनेछन् । यसैकारण क़ुरआनमा आदेश छ:

﴾ وَرَحْمَتِي وَسِعَتْ كُلَّ شَيْءٍ ۚ فَسَأَكْتُبُهَا لِلَّذِينَ يَتَّقُونَ وَيُؤْتُونَ الزَّكَاةَ وَالَّذِينَ هُمْ بِآيَاتِنَا يُؤْمِنُونَ ﴿

"तथा हाम्रो कृपा प्रत्येक वस्तुमा विस्तृत छ र हामी शीघ्र त्यसलाई तिनका लागि लेखिदिनेछौं, जो अल्लाहसित तर्सन्छन् तथा ज़कात (धर्मदान) दिन्छन् तथा जो हाम्रा निशानीहरू (लक्षणहरू) प्रति विश्वास राख्दछन् ।" (सूर: अल-आराफ-१५६)

[1]वलीसित तात्पर्य यहाँ स्वामी हो, जस्तो कि अनुवादबाट स्पष्ट छ, अपितु मित्र भन्नु त उचित छैन ।

قُلْ إِنِّيٓ أَخَافُ إِنْ عَصَيْتُ رَبِّي عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿١٥﴾

(१५) (तपाईं) भनिदिनुस् कि यदि म आफ्नो प्रभुको भनाई मान्दिन भने मलाई एउटा ठूलो दिनको यातनाबाट भय-डर लाग्छ ।[1]

مَّن يُصْرَفْ عَنْهُ يَوْمَئِذٍ فَقَدْ رَحِمَهُۥ ۚ وَذَٰلِكَ ٱلْفَوْزُ ٱلْمُبِينُ ﴿١٦﴾

(१६) जसबाट त्यसदिन यातना समाप्त गरियो, त्यसमाथि अल्लाहले अति कृपा गऱ्यो तथा यो स्पष्ट सफलता हो ।[2]

وَإِن يَمْسَسْكَ ٱللَّهُ بِضُرٍّ فَلَا كَاشِفَ لَهُۥٓ إِلَّا هُوَ ۖ وَإِن يَمْسَسْكَ بِخَيْرٍ فَهُوَ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ﴿١٧﴾

(१७) तथा यदि अल्लाह (तआला) मलाई कुनै कष्ट दिन्छ भने त्यसलाई समाप्त गर्ने अल्लाहका अतिरिक्त कोही अन्य छैन तथा यदि मलाई अल्लाह तआला लाभ प्रदान गर्दछ भने त्यो प्रत्येक कुरामाथि प्रभुत्व राख्न सक्षम छ ।[3]

---

[1]अर्थात् यदि मैले पनि आफ्नो पालनकर्ताको अवज्ञा गर्दै उसबाहेक अन्यलाई स्वामी बनाउँछु भने अल्लाहको यातना (प्रकोप) बाट बच्न सक्दिन ।

[2]जुनप्रकारले अन्य स्थानमा भनिएको छ ।

﴿ فَمَن زُحْزِحَ عَنِ ٱلنَّارِ وَأُدْخِلَ ٱلْجَنَّةَ فَقَدْ فَازَ ﴾

"जो अग्नि (नरक) बाट टाढा गरिएर स्वर्गमा प्रवेश पायो, त्यो सफल भयो ।" (सूरः आले-इमरान-१८५)

यसकारण कि सफलता हानिबाट बाँच्नु तथा लाभ प्राप्त गर्नुको नाम हो । तथा स्वर्गभन्दा ठूलो लाभ के होला ?

[3]अर्थात् लाभ हानिको अधिकारी तथा समस्त विश्वको प्रत्येक वस्तुको स्वामी अल्लाह नै हो । तथा त्यसको आदेश एव निर्णय बिना कोही खण्डन गर्ने छैन । एक हदीसमा यस विषयलाई यसप्रकार वर्णन गरिएको छ ।

« اللَّهُمَّ لَا مَانِعَ لِمَا أَعْطَيْتَ، وَلَا مُعْطِيَ لِمَا مَنَعْتَ، وَلَا يَنْفَعُ ذَا الْجَدِّ مِنْكَ الْجَدُّ »

"हे अल्लाह जे तिमीले प्रदान गर्दछौ त्यसलाई कसैले पनि रोक्न सक्दैन, तथा जुन कुरो तिमीले रोक्छौ, त्यसलाई कसैले दिन सक्दैन, तथा कसैको प्रतिष्ठा तिम्रो तुलनामा त्यसलाई लाभ पुऱ्याउन सक्दैन ।" (सहीह बुख़ारी किताबुल एअतेसाम वल कद्र वद्दावात र मुस्लिम किताबुल सलात वल मसाजिद)

وَهُوَ الْقَاهِرُ فَوْقَ عِبَادِهِ ۚ وَهُوَ الْحَكِيمُ الْخَبِيرُ ⑱

(१८) त्यही आफ्ना भक्तहरूमाथि प्रभावशाली छ तथा त्यही विज्ञाता सूचित छ ।[1]

قُلْ أَيُّ شَيْءٍ أَكْبَرُ شَهَادَةً ۖ قُلِ اللَّهُ ۖ شَهِيدٌ بَيْنِي وَبَيْنَكُمْ ۚ وَأُوحِيَ إِلَيَّ هَٰذَا الْقُرْآنُ لِأُنذِرَكُم بِهِ وَمَن بَلَغَ ۚ أَئِنَّكُمْ لَتَشْهَدُونَ أَنَّ مَعَ اللَّهِ آلِهَةً أُخْرَىٰ ۚ قُل لَّا أَشْهَدُ ۚ قُلْ إِنَّمَا هُوَ إِلَٰهٌ وَاحِدٌ وَإِنَّنِي بَرِيءٌ مِّمَّا تُشْرِكُونَ ⑲

(१९) तपाईं भन्नुस् कि कसको गवाही (साक्ष्य) महान छ, भन्नुस् कि हाम्रो तथा तिम्रो बीच अल्लाह साक्षी छ ।[2] तथा यो कुर्आन मतिर प्रकाशना गरिएको छ ताकि त्यसद्वारा तिमीलाई तथा जोसम्म पुग्छ, ती सबैलाई सचेत गरूँ,[3] के तिमी गवाही दिन्छौ कि अल्लाहसँग अन्य पूज्य छ ? तपाईं भनिदिनुस् कि म यसको गवाही दिन्न, तपाईं भन्नुस् कि त्यो एउटै आराध्य छ तथा म तिम्रो मिश्रणबाट निर्दोष छु ।

الَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ يَعْرِفُونَهُ كَمَا يَعْرِفُونَ أَبْنَاءَهُمُ ۘ الَّذِينَ خَسِرُوا أَنفُسَهُمْ فَهُمْ لَا يُؤْمِنُونَ ⑳

(२०) जसलाई हामीले किताब (तौरात तथा इन्जील) दिएका छौं उनी तपाईं (मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम) लाई त्यसैप्रकार चिन्दछन्, जस्तो

नबी सल्लल्लाहु अलैहि वसल्लम प्रत्येक नमाज़ पश्चात यस प्रार्थनालाई जप गर्नुहुन्थ्यो ।

[1]अर्थात् सबै निदार उसको अगाडि निहुरिएका छन्, ठूला-ठूला शक्तिशाली व्यक्ति उसको समक्ष असहाय छन्, त्यो प्रत्येक कुरोमाथि प्रभावशाली छ तथा सम्पूर्ण सृष्टि त्यसको आज्ञाकारी छ, त्यो आफ्नो प्रत्येक कार्यमा सक्षम छ, तथा प्रत्येक वस्तुबारे त्यसलाई सूचना छ, त्यसलाई यो पनि ज्ञान छ कि त्यसको कृपाको योग्य को छ तथा को छैन ।

[2]अर्थात् अल्लाह तआ़ला नै आफू एक तथा पालनकर्ता हुनुको स्वयं नै साक्षी छ । त्यसभन्दा ठूलो कोही पनि साक्षी छैन ।

[3]रबिअ़ बिन अनस भन्नुहुन्छ कि अब जसको पासमा पनि यो कुरा पुग्दछ, यदि त्यो रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको सच्चा अनुयायी छ, उसको यो कर्तव्य छ कि त्यो पनि मानिसहरूलाई अल्लाहतिर त्यसैप्रकार आमन्त्रित गरोस्, जुन प्रकार रसूल सल्लल्लाहु अलैहि वसल्लमले मानिसहरूलाई आमन्त्रित गर्नु भएको थियो तथा त्यसैप्रकार सतर्क गरोस्, जुन प्रकारले उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सतर्क गर्नुभएको थियो । (इब्ने कसीर)

आफ्ना पुत्रहरूलाई, जसले स्वयं आफूलाई घाटामा पारे, उनीहरूले विश्वास गर्ने छैनन् ।[1]

(२१) तथा त्यसभन्दा बढी अत्याचारी को छ जो अल्लाहमाथि मिथ्या आरोप लगाउँछ एवं त्यसका निशानीहरू (चिन्हहरू) लाई मिथ्या मान्दछ[2] वस्तुतः अत्याचारीहरू सफल हुँदैनन् ।[3]

وَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا أَوْ كَذَّبَ بِآيَاتِهِ ۗ إِنَّهُ لَا يُفْلِحُ الظَّالِمُونَ ﴿٢١﴾

(२२) तथा जुन दिन हामीले सबैलाई एकत्रित गर्नेछौं, अनि जसले मिश्रण गरे उनीहरूसित भन्नेछौं, उनी कहाँ छन् जसलाई तिमीले (अल्लाहका) साझेदार ठानिराखेका थियौ, त्यो दिन स्मरणीय छ।

وَيَوْمَ نَحْشُرُهُمْ جَمِيعًا ثُمَّ نَقُولُ لِلَّذِينَ أَشْرَكُوا أَيْنَ شُرَكَاؤُكُمُ الَّذِينَ كُنتُمْ تَزْعُمُونَ ﴿٢٢﴾

[1](يعرفونه) मा सर्वनाम (उसको) हो, जुन नबी सल्लल्लाहु अलैहि वसल्लमतिर फर्कन्छ अर्थात् अहले किताब (यहूदी एवं ईसाई) तपाईंलाई आफना पुत्रहरू जस्तै चिन्दछन्, किनभने तपाईंका विशेषताहरूको वर्णन उनका धर्मशास्त्रहरूमा विद्यमान छ तथा यसकारण अन्तिम ईशदूतलाई प्रतिक्षा गरिराखेका थिए, अब उनीहरूमध्ये जो तपाईंप्रति विश्वास गर्दैनन्, उनी ठूलो क्षतिमा छन्, किनभने यिनीहरू जानी-जानी इन्कार गरिराखेका छन् ।

[2]अर्थात् जुन प्रकारले अल्लाहमाथि मित्थ्याभियोगी सबभन्दा ठूलो अत्याचारी छ, यसैप्रकार त्यो पनि छ जो अल्लाहका आयतहरू तथा सत्य ईशदूतलाई मान्दैन । मित्थ्या दूतत्वको दावीमाथि यति कडा चेतावनीको उपरान्त पनि अनेकौंले अनेक युगमा नबी हुनुको मिथ्या दावी गरे तथा यस्ता रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको यस भविष्यवाणीको पूर्ति भयो कि तीस ठूला मिथ्यावादी हुनेछन्, प्रत्येक ईशदूत हुनुको दावी गर्नेछन्, विगत शताब्दीमा पनि "कादीयानत" को एक बन्धकले नबी हुनुको दावी गऱ्यो तथा आज त्यसका अनुयायी त्यसलाई यसकारण सत्यदूत तथा प्रतिज्ञा त मसीह मान्दछन् कि त्यसलाई एक अति अल्पसंख्या नबी मान्दछ जबकि कुनै धूर्तलाई नबी मान्नु उसको सच्चाईको प्रमाण बन्न सक्दैन । सत्य त कुर्आन तथा हदीसबाट तर्कसँगत हुनपर्दछ ।

[3]जब दुबै अत्याचारी छन्, त न मिथ्यावादी नै सफल हुनेछ र न निवर्ती । यसकारण आवश्यक छ कि प्रत्येक व्यक्ति आ-आफ्नो परिणाममा राम्ररी विचार गरोस् ।

ثُمَّ لَمْ تَكُنْ فِتْنَتُهُمْ إِلَّآ أَن قَالُوا وَاللَّهِ رَبِّنَا مَا كُنَّا مُشْرِكِينَ ﴿٢٣﴾

(२३) अनि उनको मिश्रणको, यसबाहेक अरू कुनै बहाना (जुक्ति) हुनेछैन कि भनून् अल्लाहको कसम हामी मिश्रणवादी थिएनौं।[1]

انظُرْ كَيْفَ كَذَبُوا عَلَىٰٓ أَنفُسِهِمْ وَضَلَّ عَنْهُم مَّا كَانُوا يَفْتَرُونَ ﴿٢٤﴾

(२४) हेर कि उनी कसरी आफ्नो विषयमा भूठो बोले तथा उनको आरोप समाप्त भयो, जुन आरोप उनीहरूले रच्ने गर्थे ।[2]

وَمِنْهُم مَّن يَسْتَمِعُ إِلَيْكَ ۖ وَجَعَلْنَا عَلَىٰ قُلُوبِهِمْ أَكِنَّةً أَن يَفْقَهُوهُ

(२५) उनीमध्ये केही तपाईंतिर कान थाप्छन् ।[3] तथा हामीले उनका हृदयमा पर्दा हालिदिएका छौं ।

---

[1]फित्नः को एक अर्थ मिश्रण तथा एक अर्थ क्षमा-याचना गरिएका छन् । अर्थात् अन्तमा यिनी तर्क तथा क्षमा-याचनालाई प्रस्तुत गरी छुटकारा पाउने प्रयत्न गर्नेछन् कि हामी त मूर्तिपूजक थिएनौं । तथा इमाम इब्ने ज़रीरले यसको अर्थ वर्णित गर्नुभएको छ

ثم لم يكن قيلهم عند فتنتنا إياهم اعتذارا مما سلف منهم من الشرك بالله

"जब हामीले उनीहरूलाई प्रश्नहरूको भट्टिमा हुर्‍याइदिनेछौं, त संसारमा उनीहरूले जुन मूर्तिपूजन गरे, त्यसको क्षमाको लागि यो नभनिकन उनको लागि कुनै अन्य मार्ग रहने छैन कि हामी त मूर्तिपूजक नै थिएनौं ।"

यहाँ यो शंका नहोस् कि त्यहाँ त मनुष्यका हात, खुट्टा गवाही दिनेछन् तथा मुखमा छाप लगाइनेछ, अनि यिनी इन्कार कसरी गर्नेछन् ? यसको उत्तर आदरणीय इब्ने अब्बासले दिनुभएको छ कि जब मूर्तिपूजकले हेर्नेछन् कि मुसलमान स्वर्गमा गइराखेका छन्, त उनी आपसमा विचार-विमर्श गरी मूर्तिपूजकबाट नै इन्कार गर्नेछन् । तब अल्लाह तआलाले उनीहरूको मुखमा मोहरछाप लगाइदिनेछ । तथा उनका हात-खुट्टा उनीहरूले जे गरे होलान् त्यसको गवाही दिनेछन्, अनि उनी अल्लाहसित कुनै कुरा लुकाउने शक्ति राख्ने छैन । (इब्ने कसीर)

[2]परन्तु त्यहाँ उनीहरूलाई यस स्पष्ट असत्यको कुनै लाभ हुनेछैन जुन प्रकार संसारमा मनुष्य कहिलेकाही यस्तो आभास गर्दछ । यसैप्रकार उनका भूठा ईष्टदेव पनि, जसको उनीहरू अल्लाहको अतिरिक्त पूजा एवं उपासना गर्दथे तथा आफ्नो कष्टनिवारक, सहायक, कृपा निधान तथा पक्षक ठान्दथे लुप्त हुनेछन् तथा त्यहाँ उनीहरूलाई अल्लाहका साथ अन्यलाई सम्मिलित गर्नु स्पष्ट हुनेछ, परन्तु त्यहाँ तिनको पूर्तिको कुनै साधन हुनेछैन ।

[3]अर्थात् यी मूर्तिपूजक तपाईं छेउ कुरआन त आएर सुन्दछन्, परन्तु उद्देश्य मार्गदर्शन प्राप्त गर्नु होइन, यसकारण यसबाट कुनै लाभ प्राप्त गर्दैनन् ।

وَفِيٓ ءَاذَانِهِمۡ وَقۡرٗاۚ وَإِن يَرَوۡاْ كُلَّ ءَايَةٖ لَّا يُؤۡمِنُواْ بِهَاۚ حَتَّىٰٓ إِذَا جَآءُوكَ يُجَٰدِلُونَكَ يَقُولُ ٱلَّذِينَ كَفَرُوٓاْ إِنۡ هَٰذَآ إِلَّآ أَسَٰطِيرُ ٱلۡأَوَّلِينَ ۝٢٥

कि उनीहरू त्यसलाई बुझ्न न सकुन् तथा उनका कान बहिरा छन् ।[1] र यदि उनी सबै लक्षणहरूलाई देख्छन् तैपनि तिनमा विश्वास गर्ने छैनन्, यहाँसम्मकि जब तपाईं छेउ आउँछन् त झगडा गर्दछन्, काफ़िर (विश्वासहीन) भन्दछन् कि यो मात्र पूर्वजहरूका कल्पित कथाहरू हुन् ।[2]

وَهُمۡ يَنۡهَوۡنَ عَنۡهُ وَيَنۡـَٔوۡنَ عَنۡهُۖ وَإِن يُهۡلِكُونَ إِلَّآ أَنفُسَهُمۡ وَمَا يَشۡعُرُونَ ۝٢٦

(२६) र यिनीहरू यसबाट अरूहरूलाई पनि रोक्दछन् तथा स्वयं पनि टाढा-टाढा रहन्छन् ।[3] तथा यिनीहरू स्वयं आफूलाई नष्ट गरिराखेका छन् एवं केही जान्दैनन् ।[4]

وَلَوۡ تَرَىٰٓ إِذۡ وُقِفُواْ عَلَى ٱلنَّارِ فَقَالُواْ يَٰلَيۡتَنَا نُرَدُّ وَلَا نُكَذِّبَ بِـَٔايَٰتِ رَبِّنَا وَنَكُونَ مِنَ ٱلۡمُؤۡمِنِينَ ۝٢٧

(२७) तथा यदि तपाईं त्यस समय हेर्नुहुन्छ, जब यिनी नरकको निकट उभ्याइनेछन् र भन्नेछन् ।[5] हाय ! कति राम्रो कुरो हुन्थ्यो यदि हामी पुनः फिर्ता पठाइन्थ्यौं (तथा यदि यस्तो हुन्छ) भने

[1]यसको अतिरिक्त तिनीहरूको अविश्वास प्रतिकार स्वरूप हामीले उनका हृदयमा आवरण (पर्दा) पारिदिएका छौं तथा उनका कान बहिरा गरिदिएका छौं जसको कारण उनका हृदयहरूलाई सत्य बुझ्न तथा कान सत्य सुन्ने योग्य रहेन ।

[2]अब उनी यति विचलित भइसकेका छन् कि यस अज्ञानको अन्धकारमा यदि उनी चमत्कारको प्रकाश देखे पनि यस सन्देहमा परिरहने छन् र ईमान ल्याउने छैनन्, यिनी ईमानवाट वञ्चित नै रहने छन् तथा उनको ईर्ष्या तथा द्वेष यति बढिसकेको छ कि कुरआन करीमलाई पूर्वजहरूको अप्रमाणित कथाहरू भन्दछन् ।

[3]अर्थात् जन-सामान्यलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमबाट तथा कुरआन करीमवाट रोक्दछन् ताकि उनीहरू ईमान नल्याउन् तथा स्वयं पनि टाढा-टाढा रहन्छन् ।

[4]परन्तु मानिसहरूलाई रोक्नु तथा स्वयं पनि टाढा रहनु हाम्रो अथवा हाम्रा पैग़म्वरको के विगार्ने छ ? यसप्रकारको कार्य गरेर अज्ञानतामा आफ्नो नाशको साधन स्वयं तयार गरिराखेका छन् ।

[5]यहाँ यदिको उत्तर लुप्त छ जो यसप्रकार हुनेछ, “त तपाईंलाई भयानक दृश्य देखिनेछ ।”

हामी आफ्नो प्रभुका निशानीहरूलाई झुठ्लाउँदैनौं तथा हामी निष्ठावानहरू मध्येका हुन्छौं ।[1]

(२८) अपितु जुन वस्तुलाई यसभन्दा पूर्व लुकाउने गर्दथे, त्यो उनको समक्ष आएको छ ।[2] तथा यदि यिनीहरू पुनः फिर्ता पठाइन्छन् तैपनि यिनीहरूले त्यही गर्नेछन्, जसबाट यिनलाई मनाही गरिएको थियो तथा निःसन्देह उनीहरू झूठा छन् ।[3]

بَلْ بَدَا لَهُم مَّا كَانُوا يُخْفُونَ مِن قَبْلُ ۖ وَلَوْ رُدُّوا لَعَادُوا لِمَا نُهُوا عَنْهُ وَإِنَّهُمْ لَكَاذِبُونَ ﴿٢٨﴾

[1]परन्तु त्यहाँबाट पुनः संसारमा आउन सम्भव छैन कि उनीहरू आफ्नो यस इच्छाको पूर्ति गर्न सकून् । क़ाफिरहरू त यी इच्छाहरूको वर्णन कुरआन करीममा विभिन्न स्थानमा भएको छ, जस्तैः

﴿ رَبَّنَآ أَخْرِجْنَا مِنْهَا فَإِنْ عُدْنَا فَإِنَّا ظَٰلِمُونَ ☆ قَالَ اخْسَئُوا فِيهَا وَلَا تُكَلِّمُونِ ﴾

"हे हाम्रा प्रभु ! हामीलाई यस नर्कबाट निकाल यदि हामी पुनः अवज्ञाकारी हुन्छौं भने अवश्य अत्याचारी हौं । अल्लाह तआलाको आदेश हुनेछ दुष्टहरू यसैमा परिराख, मसित कुरा नगर ।" (सूरः अल-मोमिनून-१०७-१०८)

﴿ رَبَّنَآ أَبْصَرْنَا وَسَمِعْنَا فَارْجِعْنَا نَعْمَلْ صَٰلِحًا إِنَّا مُوقِنُونَ ﴾

[2](بل) शब्द अरबी भाषामा पहिलो कुरालाई त्यागनको निम्ति प्रयुक्त हुन्छ । यसका कैयन् भावार्थ भनिएका छन् । (१) उनीहरूको लागि त्यो अविश्वास, प्रतिरोध तथा झूठ व्यक्त हुनेछ जुन त्यसभन्दा पूर्व उनीहरू संसार अथवा परलोकमा लुकाउँथे । अर्थात् जुन कुरोको इन्कार गर्दथे, जस्तै त्यहाँपनि प्रारम्भमा भन्नेछन् कि हामी त मूर्तिपूजक थिएनौं । (२) अर्थात् रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम तथा पवित्र कुरआनको ज्ञान जो उनीहरूका हृदयमा थिए तर आफ्ना अनुयायीहरूबाट लुकाउँथे, त्यहाँ प्रकाशित हुनेछन् । (३) अथवा जो अवसरवादी थिए, त्यहाँ उनको अवसरवाद प्रकाशमा आउनेछ, जसलाई उनीहरू संसारमा ईमानवालाबाट लुकाउँथे । (तफ़सीर इब्ने क़सीर)

[3]अतः पुनः संसारमा आउनुको इच्छा, ईमान ल्याउनको लागि होइन, केवल यातनाबाट बाँच्नको लागि हो जुन कि उनलाई क़ेयामत (प्रलय) को दिन अगाडि आउने छ तथा जसलाई उनीहरू निरीक्षण गर्नेछन् । यदि यिनीहरू संसारमा पुनः पठाइन्छन् तैपनि यी त्यही सब गर्नेछन् जो पूर्वमा गर्ने गर्दथे ।

وَقَالُوٓا۟ إِنْ هِىَ إِلَّا حَيَاتُنَا ٱلدُّنْيَا وَمَا نَحْنُ بِمَبْعُوثِينَ ﴿٢٩﴾

(२९) तथा उनीहरू भन्छन् कि केवल यही सांसारिक जीवन हाम्रो जीवन हो तथा हामी पुनः जीवित गरिने छैनौं ।[1]

وَلَوْ تَرَىٰٓ إِذْ وُقِفُوا۟ عَلَىٰ رَبِّهِمْ ۚ قَالَ أَلَيْسَ هَـٰذَا بِٱلْحَقِّ ۚ قَالُوا۟ بَلَىٰ وَرَبِّنَا ۚ قَالَ فَذُوقُوا۟ ٱلْعَذَابَ بِمَا كُنتُمْ تَكْفُرُونَ ﴿٣٠﴾

(३०) तथा यदि तपाईं त्यसबेला हेर्नुहुन्छ जब यिनी आफ्ना प्रभुको समक्ष उभ्याइनेछन् । अल्लाह (तआला) आदेश गर्नेछ कि के यो सत्य होइन ? उनीहरू भन्नेछन् निःसन्देह प्रभुको कसम सत्य हो । अल्लाह (तआला) भन्नेछ त आफ्नो कुफ्र (अविश्वास) को यातना सहन गर ।[2]

قَدْ خَسِرَ ٱلَّذِينَ كَذَّبُوا۟ بِلِقَآءِ ٱللَّهِ ۖ حَتَّىٰٓ إِذَا جَآءَتْهُمُ ٱلسَّاعَةُ بَغْتَةً قَالُوا۟ يَـٰحَسْرَتَنَا عَلَىٰ مَا فَرَّطْنَا فِيهَا وَهُمْ يَحْمِلُونَ أَوْزَارَهُمْ عَلَىٰ ظُهُورِهِمْ ۚ أَلَا سَآءَ مَا يَزِرُونَ ﴿٣١﴾

(३१) निःसन्देह हानिमा परे ती मानिसहरू, जसले अल्लाहसित मिलनलाई झुठ्लाए । यहाँसम्मकि जब त्यो निर्धारित समय उनीमाथि एक्कासि आइपर्नेछ, त भन्नेछन् कि हाय अफसोच हाम्रो आलस्यमाथि जे यसको विषयमा भयो । तथा उनको अवस्था यो हुनेछ कि आफ्नो बोझ आफ्नो कम्मरमा बोकेका हुन्छन् । सावधान ! उनीहरू नराम्रो बोझ बोक्ने छन् ।[3]

---

[1]यी कुरा मरणोपरान्त पुनर्जीवनबाट इन्कार धर्महीन मानिसहरू नै गर्दछन् तथा यस वास्तविकताबाट इन्कार नै अधर्म तथा अवज्ञाको कारण हो । अन्यथा यदि मनुष्यको हृदयमा परलोकप्रति सत्य विश्वास हुन्छ भने अधर्म तथा अवज्ञाको मार्गबाट तुरून्त क्षमा-याचना गर्नेछन् ।

[2]अर्थात् आँखाहरूबाट दर्शन गरे पश्चात त उनी स्वीकार गर्नेछन् कि आख़िरतको जीवन वास्तवमा सत्य छ । परन्तु त्यहाँ यस स्वीकारको लाभ हुनेछैन तथा अल्लाह तआला उनीसित भन्नेछ कि अब त आफ्नो अविश्वासको प्रतिकारमा यातनाको स्वाद चाख ।

[3]अर्थात् जो अल्लाहसित साक्षात्कारलाई ईन्कार गर्दछन्, उनी जुन क्षति तथा असफलतामा हुनेछन् तथा आफ्नो आलस्यमा जुनप्रकार लज्जित हुनेछन् तथा पापहरूको भारी बोक्नेछन्, आयतमा त्यसैको चित्रण गरिएको छ । (فرطنا فيها) मा सर्वनाम (الساعة) (प्रलयतिर फर्किराखेको छ, अर्थात् प्रलयको तयारी तथा त्यसको स्वीकृतिको विषयमा जुन त्रुटि हामीबाट भयो अथवा (الصفقة) (सौदा) तिर फर्किर राखेको छ, यो शब्द यद्यपि वाक्यमा छैन किन्तु पूर्वको वर्णनबाट

وَمَا الْحَيٰوةُ الدُّنْيَآ اِلَّا لَعِبٌ وَّلَهْوٌ ۭ وَلَلدَّارُ الْاٰخِرَةُ خَيْرٌ لِّلَّذِيْنَ يَتَّقُوْنَ ۭ اَفَلَا تَعْقِلُوْنَ ۝

(३२) तथा सांसारिक जीवन त खेल-तमाशा बाहेक केही पनि होइन तथा अन्तिम घर (परलोक) अल्लाहसित तर्सनेहरूको लागि राम्रो छ । के तिमी सोच-विचार गर्दैनौं ?

قَدْ نَعْلَمُ اِنَّهٗ لَيَحْزُنُكَ الَّذِيْ يَقُوْلُوْنَ فَاِنَّهُمْ لَا يُكَذِّبُوْنَكَ وَلٰكِنَّ الظّٰلِمِيْنَ بِاٰيٰتِ اللّٰهِ يَجْحَدُوْنَ ۝

(३३) हामी राम्ररी जान्दछौं कि तिनका कथन तपाईंलाई दुःखी पार्दछन्, त यिनीहरू तपाईंलाई झूठा भन्दैनन्, परन्तु यी अत्याचारी अल्लाहका आयतहरूलाई अस्वीकार गर्दछन् ।[1]

यो भावार्थ सांकेतिक हुन्छ अथवा यस सौदा (क्रय-विक्रय) सित तात्पर्य विश्वासको सट्टा अविश्वास गर्नु हो, अर्थात व्यापार गरेर हामीले ठूलो तुच्छता गऱ्यौ अथवा सर्वनाम (حياة) (जीवन) तिर फर्किराखेको छ, अर्थात् हामीले आफ्नो जीवनमा पाप तथा अधर्म एवं मिश्रण गरेर जुन आलस्य गऱ्यौं । (फ़तहुल क़दीर)

[1]नबी सल्लल्लाहु अलैहि वसल्लमलाई काफिरहरूले झुठ्लाएको जुन कष्ट एवं दुःख पुग्दथ्यो, त्यसको निराकरण तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लम सान्त्वनाको लागि भनिदैंछ कि यिनी तपाईंलाई झुठ्लाइराखेका छैनन् (तपाईंलाई त सत्यवादी तथा ईमान्दार मान्दछन्) बरू अल्लाहका आयतहरूलाई झुठ्लाइँदैछन् । तथा यो एउटा कथन हो कि अबू जहलले एक पटक रसूल सल्लल्लाहु अलैहि वसल्लमसित भन्यो कि हे मुहम्मद ! (सल्लल्लाहु अलैहि वसल्लम) हामी तिमीलाई होइन बरू जे-जति लिएर आएका हौ, त्यसलाई झुठ्लाउँछौं । यसमा यो आयत अवतरित भयो । तिर्मिजीको यो कथन प्रमाणअनुसार क्षीण छ परन्तु अन्य सहीह कथनबाट यस घटनाको पुष्टि हुन्छ कि मक्काका काफिर नबी सल्लल्लाहु अलैहि वसल्लमको सत्यवादिता, ईमानदारी तथा स्पष्ट न्यायवादी हुने कुरोलाई मान्दथे, परन्तु यसका बावजूद पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा ईमान ल्याउनबाट टाढा भाग्दथे । आज पनि जुन मानिसहरू नबी सल्लल्लाहु अलैहि वसल्लमको सुचरित्रता, न्यायकारी, ईमानदारी तथा सत्यवादिताको निकै वर्णन गर्दछन् तथा यस विषयमा धाराप्रभाव भाषण दिन्छन् । परन्तु रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको अनुकरण गर्नुमा कठिनाई अनुभव गर्दछन् । उहाँ सल्लल्लाहु अलैहि वसल्लमको कथनको तुलनामा चिन्तन तथा विचार तथा आफ्नो नेताहरूका कथनहरूलाई महत्व दिन्छन् । उनीहरूले विचार गर्नुपर्दछ कि यो कसको आचरण हो जसलाई उनीहरूले अपनाएका छन् ?

وَلَقَدْ كُذِّبَتْ رُسُلٌ مِّن قَبْلِكَ فَصَبَرُوا عَلَىٰ مَا كُذِّبُوا وَأُوذُوا حَتَّىٰ أَتَاهُمْ نَصْرُنَا ۚ وَلَا مُبَدِّلَ لِكَلِمَاتِ اللَّهِ ۚ وَلَقَدْ جَاءَكَ مِن نَّبَإِي الْمُرْسَلِينَ ﴿٣٤﴾

(३४) तथा तपाईंभन्दा पूर्व रसूलहरूलाई झुठा भनिसकिएको छ र उनीहरूले त्यसमाथि धैर्य-धारण गरे तथा उनीहरूलाई कष्ट दिइयो, यहाँसम्मकि उनको पासमा हाम्रो सहायता आयो,[१] अल्लाहका कुराहरू कसैले परिवर्तन गर्न सक्नेछैन ।[२] तथा तपाईं छेउ पैग़म्बरहरू (उपदेशकहरू) का घटना आइसकेका छन् ।[३]

وَإِن كَانَ كَبُرَ عَلَيْكَ إِعْرَاضُهُمْ فَإِنِ اسْتَطَعْتَ أَن تَبْتَغِيَ نَفَقًا فِي

(३५) र यदि उनको बिमुखता तपाईंलाई असहनीय छ भने यदि तपाईंसित हुनसक्छ भन्ने धर्तीमा कुनै सुरुङ

[१]नबी सल्लल्लाहु अलैहि वसल्लमलाई पुनः सान्त्वना दिइराखिएको छ कि यो प्रथम घटना होइन कि काफिर अल्लाहका पैग़म्बरहरूबाट इन्कार गरिराखेका छन्, बरू यसभन्दा पूर्व धेरै रसूल गुज्रिसकेका छन् जसलाई झुठ्लाउँदै गरियो । त्यसैप्रकार तपाईं सल्लल्लाहु अलैहि वसल्लम पनि उनको अनुकरण गर्दै त्यसै प्रकार धैर्य र साहसले काम लिनुस जुनप्रकार उनीहरूले झुठ तथा कष्ट पुग्दा धैर्यले सञ्चालित भएका थिए, यहाँसम्मकि तपाईं सल्लल्लाहु अलैहि वसल्लमको लागि पनि हाम्रो सहायता पुगोस्, जुनप्रकारले हामी पूर्वका रसूलहरूको सहायता गर्‍यौं तथा हामीले आफ्नो वचन भङ्ग गर्दैनौं । हामीले वचन दिएका छौं ।

﴿ إِنَّا لَنَنصُرُ رُسُلَنَا وَالَّذِينَ آمَنُوا ﴾

"निःसन्देह हामीले आफ्ना पैग़म्बर तथा निष्ठावानहरूको सहायता गर्नेछौं ।" (सूरः अल-मोमिन-५१)

﴿ كَتَبَ اللَّهُ لَأَغْلِبَنَّ أَنَا وَرُسُلِي ﴾

"अल्लाहले यो निर्णय गरिदिएको छ कि म र मेरो रसूल प्रभावशाली रहने छौं ।"(सूरः अल-मुजादिल-२) इत्यादि आयतहरूबाट (जस्तै सूरः अल-सफ़्फ़ात-१७१ तथा १७२)

[२]बरू त्यसको वचन पूर्ण भएर नै रहनेछ कि तपाईं क़ाफिरहरूमाथि प्रभावशाली तथा विजयी रहनु हुनेछ । अतः यस्तै नै भयो ।

[३]जसबाट स्पष्ट भयो कि प्रारम्भमा यद्यपि उनका समुदायहरूले उनलाई झुठ्लाए, उनलाई कष्ट दिए तथा उनको जीवनका खतरा भने, परन्तु अन्ततः अल्लाहको कृपाले सफलता प्राप्त भयो तथा स्थाई मुक्ति उनको भाग्य बन्यो ।

الْأَرْضِ أَوْ سُلَّمًا فِي السَّمَاءِ فَتَأْتِيَهُم بِآيَةٍ ۚ وَلَوْ شَاءَ اللَّهُ لَجَمَعَهُمْ عَلَى الْهُدَىٰ ۚ فَلَا تَكُونَنَّ مِنَ الْجَاهِلِينَ ﴿٣٥﴾

अथवा आकाशमा कुनै भऱ्याङ खोज्नुस् र उनको पासमा कुनै चमत्कार ल्याईदिनुस् तथा यदि अल्लाहले चाहेको भए उनीहरूलाई सत्य-मार्गमा एकत्रित गरिदिन्थ्यो ।[1] अतः मूर्ख नादान नबन्नुस् ।[2]

إِنَّمَا يَسْتَجِيبُ الَّذِينَ يَسْمَعُونَ ۘ وَالْمَوْتَىٰ يَبْعَثُهُمُ اللَّهُ ثُمَّ إِلَيْهِ يُرْجَعُونَ ﴿٣٦﴾

(३६) तिनै व्यक्तिहरू स्वीकार गर्दछन्, जो सुन्दछन् ।[3] तथा मरेका मानिसहरूलाई अल्लाह (तआला) जीवित पारेर उठाउनेछ, अनि सबै अल्लाहतिर नै ल्याइनेछन् ।

وَقَالُوا لَوْلَا نُزِّلَ عَلَيْهِ آيَةٌ مِّن رَّبِّهِ ۚ قُلْ إِنَّ اللَّهَ قَادِرٌ عَلَىٰ أَن يُنَزِّلَ

(३७) तथा उनीहरूले भने कि उनीमाथि उनका पालनकर्ताको तर्फबाट कुनै चमत्कार किन अवतरित गरिएन ?

---

[1]नबी सल्लल्लाहु अलैहि वसल्लमलाई विरोधी तथा काफिरहरूले झुठ्लाउँदा जुन कष्ट तथा दुःख पुग्दथ्यो, त्यसको आधारमा अल्लाह तआलाले आदेश गरिराखेको छ कि यो त अल्लाह तआलाको इच्छा तथा भाग्यले हुनु नै थियो तथा अल्लाहको आदेश बिना तपाईं सल्लल्लाहु अलैहि वसल्लम उनीहरूलाई इस्लाम धर्म स्वीकार गर्नको लागि तयार गर्न सक्नुहुन्न, चाहे तपाईं सल्लल्लाहु अलैहि वसल्लम धर्तीमा सुरुङ खनेर तथा आकाशमा भऱ्याङ लगाएर कुनै निशानी ल्याएर उनलाई देखाइ पनि दिनुस् । प्रथम त तपाईं सल्लल्लाहु अलैहि वसल्लमको लागि यस्तो गर्नु असम्भव छ । तथा यदि यस्तो माने पनि कि तपाईं सल्लल्लाहु अलैहि वसल्लम यस्तो पनि गर्न सक्नुहुन्छ तै पनि यिनीहरू ईमान ल्याउने छैनन् किनभने उनको ईमान ल्याउनु अल्लाह तआलाको इच्छा तथा आदेशको अधीन छ जो पूर्णरूपले मनुष्यको बौद्धिक सीमाभन्दा बाहिरको कुरा हो । बरू त्यसको एउटा स्पष्ट प्रमाण यो हो कि अल्लाह तआला उनीहरूलाई अधिकार तथा विचारको स्वतन्त्रता दिएर परीक्षा लिइराखेको छ । अन्यथा अल्लाह तआलाको निम्ति यो कठिन थिएन कि सबै मानिसहरूलाई सत्य-कर्ममा लगाइदेओस् । त्यसको लागि शब्द (كُن) (कुन) बाट नै एकक्षण भन्दा कममा यो कार्य हुनसक्छ ।

[2]अर्थात् तपाईं सल्लल्लाहु अलैहि वसल्लम उनीहरूको अविश्वासबाट दुःखी नहुनुस् किनभने यसको सम्बन्ध अल्लाह तआलाको इच्छासित छ, यसकारण यसलाई अल्लाहकै लागि छाडिदिनुस्, त्यही नै यसको कारण तथा समस्यालाई राम्ररी बुझ्दछ ।

[3]अर्थात् ती काफिरहरूको अवस्था मृतकहरूको समान छ, जुन प्रकारले उनी बोल्ने तथा सुन्ने शक्तिबाट बञ्चित छन्, यिनीहरू पनि आफ्ना बुद्धि तथा विचारले सत्यलाई बुझ्ने काम गर्दैनन्, यसकारण यिनी पनि मृतक समान छन् ।

ايَةً وَّلٰكِنَّ اَكْثَرَهُمْ لَا يَعْلَمُوْنَ ۝٣٧

तपाईं भनिदिनुस् कि अल्लाह कुनै चमत्कार अवतरित गर्न पूर्ण सामर्थ्य राख्दछ ।[1] किन्तु अधिकतर व्यक्तिहरू बुझ्दैनन् ।[2]

وَمَا مِنْ دَآبَّةٍ فِي الْاَرْضِ وَلَا طٰٓئِرٍ يَّطِيْرُ بِجَنَاحَيْهِ اِلَّآ اُمَمٌ اَمْثَالُكُمْ ۗ مَا فَرَّطْنَا فِي الْكِتٰبِ مِنْ شَيْءٍ ثُمَّ اِلٰى رَبِّهِمْ يُحْشَرُوْنَ ۝٣٨

(३८) तथा जति प्रकारका हिड्ने जीवधारी धर्तीमा छन् तथा जति प्रकारका पखेटाबाट उड्ने पंक्षीहरू छन्, उनीहरूमध्ये कुनै पनि प्रकार यस्तो छैन जुनकि तिम्रो जस्तै गुटमा छैनन् ।[3] हामीले पुस्तिकामा लेख्नबाट कुनै वस्तु छोडेनौं ।[4]

---

[1]अर्थात् यस्तो चमत्कार जसले उनलाई ईमान ल्याउनमा बाध्य गरिदेओस्, जस्तो कि उनको आँखाको समक्ष फरिश्ता (ईशदूत) उत्रोस्, अथवा पर्वतलाई उठाएर उनीमाथि गरिदेओस्, जुनप्रकार इस्राईलको सन्तानसित भयो । भन्यो, अल्लाह तआला निःसन्देह यस्तो गर्न सक्दछ परन्तु उसले यस्तो यसकारण गरेन कि फेरि त मनुष्यको परीक्षाको समस्यानै समाप्त हुनेछ । यसका अतिरिक्त उनको मागमा यदि कुनै चमत्कार देखाइ पनि दिइन्थ्यो, तैपनि यिनीहरू ईमान ल्याउँदैनथे, तब तुरुन्त उनीहरूलाई यस संसारमा कठोर दण्ड दिइन्थ्यो । यसप्रकार अल्लाहको यस निर्णयबाट उनीहरूकै लागि सांसारिक लाभ छ ।

[2]जो अल्लाहको आदेश तथा निर्णयको भेद बुझ्न सक्दैनन् ।

[3]अर्थात् उनीहरूलाई पनि अल्लाह तआलाले त्यसैप्रकार जन्म दियो जुनप्रकार तिमीलाई जन्म दियो, यसैप्रकार उनीहरूलाई पनि जीविका उपलब्ध गराउँछ, जुनप्रकार उनीहरूलाई उपलब्ध गराउँछ तथा तिमीजस्तै उनीहरू पनि त्यसको शक्ति तथा ज्ञानको परिधिमा छन् ।

[4]पुस्तिकासित तात्पर्य लौह महफूज हो । (सुरक्षित पुस्तक हो जसमा सबै मानिसहरूको भाग्य उनीहरूका कर्म अनुसार अल्लाहको पूर्व ज्ञानको आधारमा सुरक्षित गरी लेखिएको छ) अर्थात् त्यहाँ प्रत्येक कुरो लेखिएको छ अथवा कुरआन हो जसमा संक्षिप्त तथा विस्तारपूर्वक धर्मका प्रत्येक नियममाथि प्रकाश पारिएको छ । जस्तो कि अन्य स्थानमा आदेश गरिएको छ ।

﴿ وَنَزَّلْنَا عَلَيْكَ الْكِتٰبَ تِبْيَانًا لِّكُلِّ شَيْءٍ ﴾

"हामीले तपाईंमाथि यस्तो किताब उतारेका छौं जसमा प्रत्येक कुरोको वर्णन छ ।" (सूरः अल-नहल-८९)

यहाँ विषयको आधारमा प्रथम अर्थ निकटतम छ ।

अनि सबै आफ्ना प्रभु छेउ एकत्रित गरिने छन् ।[1]

(३९) जसले हाम्रा निशानीहरूलाई मानेनन्, ती बहिरा, लाटा अन्धाहरूमा छन् । अल्लाह जसलाई चाहन्छ विपथ गरिदिन्छ तथा जसलाई चाहन्छ सोझो मार्गमा लगाईदिन्छ ।[2]

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا صُمٌّ وَبُكْمٌ فِي الظُّلُمَاتِ ۗ مَنْ يَشَإِ اللَّهُ يُضْلِلْهُ وَمَنْ يَشَأْ يَجْعَلْهُ عَلَىٰ صِرَاطٍ مُسْتَقِيمٍ ﴿٣٩﴾

[1]अर्थात् सबै वर्णित गुट एकत्रित गरिने छन् । यसबाट विद्वानहरूको एक समूहले यो अर्थ निकालेको छ कि जसरी मनुष्यहरूलाई मृत्यु पश्चात् जीवित पारी एकत्रित गरेर उनका कर्महरूको हिसाब हुनेछ, त्यसरी नै अन्य जीवहरू तथा अन्य सृष्टिलाई पनि जीवित गरी हिसाब हुनेछ । जुनप्रकार एक हदीसमा पनि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "यदि कुनै सिङवाली बाखाले सिङ नभएको बाखामाथि कुनै अत्याचार गरेको होला भने केयामतको दिन सिङवाली बाखासित बदला लिइनेछ ।" (सहीह मुस्लिम संख्या १९९७) केही विद्वानहरूले हस्र तात्पर्य केवल मृत्यु लिएका छन् अर्थात् सबैलाई मृत्यु आउनेछ । केही विद्वानहरूले भनेका छन् कि यहाँ हश्रसित तात्पर्य अविश्वासीहरूको एकत्रित हुनु हो । तथा मध्यमा जे कुराहरू आएका छन् उनी केवल एक मध्यवर्ती वाक्य हुन् । तथा हदीसमा जुन बाखासित बदला लिनुको वर्णन छ यो उदाहरणको लागि प्रयोग भएको छ जसको उद्देश्य क्यामतको हिसाब-किताबको प्रवलता एवं विशेषतालाई स्पष्ट गर्नु हो । अथवा यो कि जीवधारीहरू मध्येबाट केवल अत्याचारीहरू तथा जसमाथि अत्याचार भएको छ, दुबैलाई जीवित गरेर अत्याचारीसित, जसमाथि अत्याचार भएको छ त्यसलाई बदला दिलाएर पुनः मारिदिइने छ । (फ़तहुल क़दीर आदि)

[2]अल्लाहका आयतहरूलाई झुठ्लाउनेहरू आफ्ना कानहरूसित सत्य कुरा सुन्दैनन् तथा आफ्नो मुखले सत्य वोल्दैनन्, यसकारण उनी यस्ता हुन्छन्, जस्तो मुक तथा बधिर हुन्छन् । यसको अतिरिक्त यो कुफ्र अपमानको अन्धकारमा घेरिएका हुन्छन् यसकारण उनीहरूलाई कुनै यस्तो कुरो देखिंदैन जसबाट उनी आफ्नो सुधार गर्न सकून । अर्थात् जस्तो उनको चिन्तन शक्ति खोसिसकिएको होस् जसको कारण उनी परिस्थितिवाट लाभ उठाउन सक्दैनन् । अनि भन्यो, "सबै अधिकार अल्लाहकै हातमा छन् जसलाई त्यो चाहन्छ विचलित गरिदिन्छ जसलाई चाहन्छ सोझो मार्गमा लगाईदिन्छ ।" परन्तु उसको यो निर्णय निराधार छैन, बरू न्याय तथा निर्णयको नियमको आधारमा हुन्छ । पथ-विचलित त्यसैलाई नै गर्छ, जो स्वयं विचलित हुन्छ तथा त्यसबाट निस्कनुको न त प्रयत्न गर्न चाहन्छ न प्रिय ठान्दछ । (यसको अतिरिक्त हेर्नुस् सूरः अल-बक़रः आयत संख्या-२६ को व्याख्या)

قُلْ أَرَءَيْتَكُمْ إِنْ أَتَىٰكُمْ عَذَابُ ٱللَّهِ أَوْ أَتَتْكُمُ ٱلسَّاعَةُ أَغَيْرَ ٱللَّهِ تَدْعُونَ إِن كُنتُمْ صَٰدِقِينَ ﴿٤٠﴾

(४०) तपाईं भनिदिनुस् कि आफ्नो अवस्था त भन कि यदि तिमीमाथि अल्लाहको कुनै यातना पर्छ अथवा तिमीमाथि केयामत नै आइपुग्छ तब के अल्लाहको अतिरिक्त अन्यलाई गुहार्ने छौ ? यदि तिमी साँचो हौ ।

بَلْ إِيَّاهُ تَدْعُونَ فَيَكْشِفُ مَا تَدْعُونَ إِلَيْهِ إِن شَآءَ وَتَنسَوْنَ مَا تُشْرِكُونَ ﴿٤١﴾

(४१) बरू विशेषरूपले उसैलाई पुकार्नेछौ, अनि जसको लागि तिमी पुकार्नेछौ, यदि त्यो चाहन्छ भने त्यसलाई हटाई पनि दिन्छ तथा जसलाई तिमी साभ्रेदार ठहराउँछौ ती सबैलाई बिर्सिदिनेछौ ।[1]

وَلَقَدْ أَرْسَلْنَآ إِلَىٰٓ أُمَمٍ مِّن قَبْلِكَ فَأَخَذْنَٰهُم بِٱلْبَأْسَآءِ وَٱلضَّرَّآءِ لَعَلَّهُمْ يَتَضَرَّعُونَ ﴿٤٢﴾

(४२) तथा हामीले अन्य समुदायहरूतिर पनि जो कि तपाईंभन्दा पूर्व बितिसकेका छन् पैगम्बर पठाएका थियौं, उनलाई पनि हामीले निर्धनता तथा रोगले समात्यौं ताकि उनी शिथिल परून् ।

فَلَوْلَآ إِذْ جَآءَهُم بَأْسُنَا تَضَرَّعُوا۟ وَلَٰكِن قَسَتْ قُلُوبُهُمْ وَزَيَّنَ لَهُمُ ٱلشَّيْطَٰنُ مَا كَانُوا۟ يَعْمَلُونَ ﴿٤٣﴾

(४३) यसप्रकार उनीहरूलाई जुन हाम्रो दण्ड भएको थियो, उनीहरू शिथिल किन परेनन् ? परन्तु उनका हृदय कठोर भए तथा शैतानले उनका कर्महरूलाई उनका विचारहरूमा अलंकृत गरिदियो ।[2]

[1] (أَرَأَيْتَكُم) मा काफ, मीम, सम्बोधनको लागि छ र यसको अर्थ यो हो कि मलाई भन अथवा सूचित गर । यस विषयको चर्चा पवित्र कुरआनमा कैयन स्थानहरूमा गरिएको छ, (हेर्नुस् सूरः बक्र आयत १६५ को भाष्य) यसको भावार्थ यो भयो कि एकेश्वरवाद मानव प्रकृतिको ध्वनि हो तथा त्यो समाज अथवा पूर्वजहरूको प्रथाको अनुसरणको कारण अनेकेश्वरवादी आस्था एवं कर्ममा लिप्त हुन्छ । तर जब कुनै संकटमा पर्दछ तब फेरि यो सबै बिर्सन्छ तथा सहसा उसै एकलाई पुकार्दछ जसलाई पुकार्नु पर्दछ । काश ! मानिसहरू यसै प्रकृतिमा स्थिर रहून, किनभने मोक्ष यसै प्राकृतिक ध्वनिलाई अपनाउनुमा छ ।

[2] जब समुदाय नैतिक तथा क्रमिक पतनका कारण आफ्ना मनहरूलाई मलिन गर्दछन् त त्यस समय अल्लाहको प्रकोप पनि उनीहरूलाई घोर अचेतनाबाट सचेत गर्नुमा असफल भईहाल्छ तथा तीनका हात क्षमा-याचनाको लागि अल्लाहतिर उठ्दैनन् तथा हृदय अल्लाहको लागि नतमस्तक हुँदैनन्, न उनको ध्यान सुधारतिर फर्कन्छ, बरू आफ्ना दुष्कर्महरूको परिकल्पनाका सुन्दर पर्दाहरूमा अवृत गरी आफ्ना मनलाई सन्तोष दिन्छन्, जसलाई शैतान (राक्षस) ले उनको निम्ति अलङ्कृत बनाइदिएको छ ।

فَلَمَّا نَسُوا مَا ذُكِّرُوا بِهِ فَتَحْنَا عَلَيْهِمْ أَبْوَابَ كُلِّ شَيْءٍ حَتَّىٰ إِذَا فَرِحُوا بِمَا أُوتُوا أَخَذْنَاهُم بَغْتَةً فَإِذَا هُم مُّبْلِسُونَ ﴿٤٤﴾

(४४) तथा जब उनी त्यस प्रसंगलाई बिर्सिदिए जसको शिक्षा दिइयो तब हामीले उनीहरूको लागि प्रत्येक वस्तुको द्वार खोलिदियौं यहाँसम्मकि उनी जब आफ्ना प्राप्त वस्तुहरूमाथि घमण्डी भए तब उनीहरूलाई हामीले अकस्मात समात्यौं र उनी निराश भए ।

فَقُطِعَ دَابِرُ الْقَوْمِ الَّذِينَ ظَلَمُوا ۚ وَالْحَمْدُ لِلَّهِ رَبِّ الْعَالَمِينَ ﴿٤٥﴾

(४५) अनि अत्याचारी व्यक्तिहरूको जरा काटियो तथा अल्लाह (तआला) को लागि प्रशंसा छ जो विश्वको पोषक हो ।[1]

قُلْ أَرَأَيْتُمْ إِنْ أَخَذَ اللَّهُ سَمْعَكُمْ وَأَبْصَارَكُمْ وَخَتَمَ عَلَىٰ قُلُوبِكُم مَّنْ إِلَٰهٌ غَيْرُ اللَّهِ يَأْتِيكُم بِهِ ۗ انظُرْ

(४६) (तपाईं) भन्नुस् कि यो भन यदि अल्लाह (तआला) तिम्रो सुन्ने तथा देख्ने शक्ति पूर्णरूपले लिइहाल्छ तथा तिम्रा हृदयहरूमा मोहर लगाइदिन्छ भने अल्लाह (तआला) को अतिरिक्त कोही

[1]यसमा त्यस समुदायको वर्णन छ, जो अल्लाहलाई बिर्सिदिए । कहिलेकाहीं सामयिक रूपले यस्ता समुदायहरूको लागि सुख-सुविधाका सबै साधनहरूका द्वार खोलिन्छन् । यहाँसम्मकि उनी त्यसमा अति मँग्न हुन्छन् तथा आफ्नो भौतिक सुख तथा उन्नतिमा घमण्ड गर्न थाल्छन् तब हामी आफ्नो हिसाबको लागि समात्छौं तथा उनको उन्मूलन गरिदिन्छौं । हदीसमा वर्णित छ नबी सल्लल्लाहु अलैहि वसल्लमको आदेश भयो कि जब तिमी हेर्छौ कि अल्लाह तआला अवज्ञा उपरान्त कसैलाई उसको इच्छा अनुसार संसार प्रदान गरिराखेको छ तब यो खुकुलो पार्नु हो । अनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यही आयत पढ्नुभयो । (मुसनद अहमद भाग-४, पृष्ठ-१४५) कुर्आन करीमको यस आयत तथा हदीस नबी करीम सल्लल्लाहु अलैहि वसल्लमबाट यो ज्ञान भयो कि सांसारिक सम्पन्नता तथा उन्नति यस कुराको प्रमाण होइन कि जुन व्यक्ति अथवा समुदयलाई यो प्राप्त छ त्यो अल्लाह तआलाको प्रिय हो तथा अल्लाह तआला उसित प्रसन्न छ । जस्तो कि केही व्यक्ति यस्तो ठान्दछन्, बरू केही त उनीहरूलाई ﴿أَنَّ الْأَرْضَ يَرِثُهَا عِبَادِيَ الصَّالِحُونَ﴾ को प्रधान मान्दछन् तथा उनीहरूलाई पूनीत भक्त मान्दछन् । यस्तो ठान्नु तथा भन्नु गलत हो । कुपथ समुदायलाई सांसारिक प्रसन्नता, उन्नति तथा सु:ख परीक्षा एवं अवसर दिनको लागि हो न कि यो अविश्वासको प्रतिफल हो ।

كَيْفَ نُصَرِّفُ الْآيَاتِ ثُمَّ هُمْ يَصْدِفُونَ ﴿٤٦﴾

पूज्य छ कि यो तिमीलाई पुन: दिनसकोस् ? तपाईं हेर्नुस् कि हामी कुन प्रकारले तर्कलाई विभिन्न कोणबाट प्रस्तुत गरिराखेका छौं । तैपनि उनीहरू तर्किराखेका छन् ।[1]

قُلْ أَرَأَيْتَكُمْ إِنْ أَتَاكُمْ عَذَابُ اللَّهِ بَغْتَةً أَوْ جَهْرَةً هَلْ يُهْلَكُ إِلَّا الْقَوْمُ الظَّالِمُونَ ﴿٤٧﴾

(४७) (तपाईं) भन्नुस् कि यो भन कि यदि तिमीमाथि अल्लाहको प्रकोप अकस्मात अथवा सावधानीमा आइपर्छ भने के अत्याचारीहरूबाहेक अन्य कोही मारिने छ ।[2]

وَمَا نُرْسِلُ الْمُرْسَلِينَ إِلَّا مُبَشِّرِينَ وَمُنْذِرِينَ ۖ فَمَنْ آمَنَ

(४८) तथा हामीले पैगम्बरलाई यसकारण पठाउने गर्छौं कि उनी शुभ- सूचना देऊन् तथा तर्साऊन् ।[3] अनि जो

[1]आँखा, कान तथा हृदय मानव शरीरका प्रमुख अङ्ग हुन्, अल्लाह (परमेश्वर) भनिराखेको छ कि यदि त्यो चाहन्छ भने यी अङ्गहरूमा जुन विशेषताहरू (योग्यताहरू) राखिएका छन्, तिनलाई खोस्न सक्छ अर्थात् सुन्ने, देख्ने सामर्थ्य । जुनप्रकार धर्म-भ्रष्टहरूका अङ्ग यी विशेषताहरूबाट बञ्चित हुन्छन् अथवा त्यो चाहन्छ भने यी अङ्गहरूलाई नै निरस्त गर्न सक्तछ, त्यो दुबै कुराहरूको सामर्थ्य राख्दछ, त्यसको पकडबाट कोही बच्न सक्तैन, परन्तु त्यो अवस्था बाहेक जबकि त्यसले स्वयं कसैलाई बचाउन चाहोस् । आयतहरूलाई विभिन्न रूपले प्रस्तुत गर्नुको अभिप्राय यो हो कि कहिल्यै भय तथा शुभ-सूचना दिएर, कहिले प्रलोभन तथा चेतावनीबाट तथा कहिले अन्य साधनहरूबाट बुझाओस् ।

[2]अकस्मात सित तात्पर्य रात्रि तथा सावधानीबाट तात्पर्य दिन हो, जसलाई सूर: यूनुसमा ﴿ بَيَاتًا أَوْ نَهَارًا ﴾ (सूर: यूनुस-५०) बाट वर्णित गरिएको छ अर्थात् दिनमा प्रकोप आओस् वा रात्रीमा । (بغتة) अनि त्यो प्रकोप हो जुन बिना भूमिका एवं लक्षण आओस् तथा (جهرة) त्यो प्रकोप हो जुन भूमिका एवं लक्षणहरूको उपरान्त आउँछ । यी प्रकोप जुन समुदायहरूको विनाशको लागि आउँछ उनीहरूमाथि आउँछ जो अत्याचारी हुन्छन् अर्थात् अविश्वास तथा अवज्ञामा अल्लाहका नियमहरूको अपार उल्लंघन गर्दछन् ।

[3]उनीहरू आज्ञापालकहरूलाई ती पुरस्कारहरू तथा ठूलो प्रतिकारको शुभ-सूचना दिन्छन् जुन अल्लाह तआलाले स्वर्गको रूपमा उनीहरूको निम्ति तयार गरिसकेको छ, तथा अवज्ञाकारीहरूलाई ती यातनाहरूबाट तर्साउन्छन्, जुन अल्लाह तआलाले उनीहरूको लागि नरकको रूपमा तयार गरिसकेको छ ।

وَأَصْلَحَ فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ۝٤٨

ईमान ल्याउँछ तथा आफ्नो सुधार गर्छ उनीहरूलाई न कुनै भय हुनेछ र न उनी दुःखी हुनेछन् ।[१]

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا يَمَسُّهُمُ الْعَذَابُ بِمَا كَانُوا يَفْسُقُونَ ۝٤٩

(४९) तथा जो हाम्रा आयतहरूलाई झुठ्लाउँछन्, उनीहरूलाई प्रकोप पुग्नेछ किनभने उनी अवज्ञाकारी हुन् ।[२]

قُل لَّا أَقُولُ لَكُمْ عِندِي خَزَائِنُ اللَّهِ وَلَا أَعْلَمُ الْغَيْبَ وَلَا أَقُولُ لَكُمْ إِنِّي مَلَكٌ ۖ إِنْ أَتَّبِعُ إِلَّا مَا يُوحَىٰ إِلَيَّ ۚ قُلْ هَلْ يَسْتَوِي الْأَعْمَىٰ وَالْبَصِيرُ ۚ أَفَلَا تَتَفَكَّرُونَ ۝٥٠

(५०) (तपाईं) भनिदिनुस् कि म न त तिमीसित यो भन्छु कि मेरो पासमा अल्लाहको कोष छ तथा न म परोक्ष जान्दछु तथा न म यो भन्दछु कि म फरिश्ता हूँ । म त केवल जे-जति मेरो पासमा ईशवाणी आउँछ त्यसको अनुसरण गर्दछु ।[३] (तपाईं) भन्नुस् कि अन्धा

[१]भविष्य अर्थात् परलोकका आगामी परिस्थितिहरूको उनीहरूलाई भय छैन तथा आफ्नो पछाडी संसारमा जे-जति उनीहरू छाडेर आएका छन् अथवा संसारको जुन सुख पाउन सकेनन्, त्यसमाथि दुःखी हुने छैनन् किनभने दुबै लोकमा उनको संरक्षक तथा मित्र त्यो पालनकर्ता हो, जो दुबै लोकको पोषक हो ।

[२]अर्थात् उनीहरूलाई यो यातना यसकारण हुनेछ कि उनीहरूले विश्वास गरेनन् न अल्लाहले भनिएको मार्गमा हिंडे । अल्लाहको आज्ञाको पालन गरेनन् तथा त्यसका आदेशहरूको निरादर गरे तथा अवैध एवं निषेध कार्य गरे तथा त्यसको सम्मान कम गर्नुको प्रयत्न गरे ।

[३]"मेरो पासमा अल्लाहको कोष पनि छैन" यसको तात्पर्य यो हो कि प्रत्येक प्रकारको शक्ति तथा सामर्थ्य मसँग छैन कि म तिमीलाई अल्लाहको आदेश र इच्छाविना कुनै चमत्कार देखाउन सकूँ जस्तो कि तिमी चाहन्छौ, जसलाई देखेर तिमीलाई मेरो सत्यतामा विश्वास होस् । मसित अप्रत्यक्षको ज्ञान पनि छैन जसबाट म भविष्यमा घटित हुने घटनाहरूबाट तिमीलाई सतर्क गर्न सकूँ । म फरिश्ता हुनुको दाबी पनि गर्न सक्दिन कि तिमी मलाई यस्तो कार्य गर्नको निम्ति बाध्य गर जुन मनुष्यको शक्ति र सामर्थ्यभन्दा बाहिरको कुरो हो । म त केवल त्यस प्रकाशना (वह्यी) को पालनकर्ता हूँ, जुन ममाथि अवतरित गरियो तथा यसमा हदीस पनि छ, जस्तो कि तपाईंले भन्नुभयो "मलाई कुर्आनका साथ-साथै त्यसको समान पनि प्रदान गरियो ।" यो समान हदीस रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम हो ।

तथा आँखा भएका कसरी समान हुन सक्दछन् ?[1] त के तिमी विचार गर्दैनौं ।

وَأَنذِرْ بِهِ الَّذِينَ يَخَافُونَ أَن يُحْشَرُوا إِلَىٰ رَبِّهِمْ لَيْسَ لَهُم مِّن دُونِهِ وَلِيٌّ وَلَا شَفِيعٌ لَّعَلَّهُمْ يَتَّقُونَ ﴿٥١﴾

(५१) तथा यस्ता व्यक्तिहरूलाई तर्साउनुस् जसमा यस कुराको भय छ कि आफ्नो प्रभुका समक्ष यस अवस्थामा एकत्रित गरिने छन् कि जति अल्लाहका अतिरिक्त छन् न उनीहरूको सहायता गर्नेछन् तथा न कोही सिफारिश गर्ने हुनेछ, ताकि उम्कन सकुन् ।[2]

وَلَا تَطْرُدِ الَّذِينَ يَدْعُونَ رَبَّهُم بِالْغَدَاةِ وَالْعَشِيِّ يُرِيدُونَ وَجْهَهُ ۖ مَا عَلَيْكَ مِنْ حِسَابِهِم مِّن شَيْءٍ وَمَا مِنْ حِسَابِكَ عَلَيْهِم مِّن شَيْءٍ فَتَطْرُدَهُمْ فَتَكُونَ مِنَ الظَّالِمِينَ ﴿٥٢﴾

(५२) तथा तपाईं उनीहरूलाई न निकाल्नुस् जो प्रातः, सन्ध्या अल्लाहको बन्दना गर्दछन्, विशेषरूपले त्यसको प्रसन्नताको चिन्ता गर्दछन् । उनीहरूको हिसाब अलिकति पनि तपाईसँग सम्बन्धित छैन तथा तपाईंको हिसाब अलिकति पनि उनीहरूसित सम्बन्धित छैन जसले गर्दा तपाईंले उनीहरूलाई निकाल्नुहोस् ।

[1]यो प्रश्न इन्कारको लागि छ अर्थात् अन्धा तथा द्रष्टा, कुमार्ग तथा पथगामी विश्वासधारी तथा अनिष्ट समान हुन सक्दैनन् ।

[2]अर्थात् तर्साउनुको लाभ यस्तै मानिसहरूको लागि हुनसक्छ, अन्यथा जो पूनर्जीवन तथा प्रलय एवं एकत्रित गरिनुमा विश्वास गर्दैनन्, उनीहरू आफ्नो अविश्वास तथा अवज्ञामा अडिग रहन्छन् । यसको अतिरिक्त ती अहले किताब तथा काफिरहरू एवं मूर्तिपूजकहरूको खण्डन पनि छ जो आफ्ना पूर्वज तथा आफ्ना मूर्तिहरूलाई आफ्ना सिफारिस चढाउने ठान्दछन् । "अर्थात् उनीहरू कष्ट निवारक, सिफारिश चढाउने हुने छैनन् ।" को अर्थ उनीहरूको लागि छ जो नरकको यातनाका पात्र भइसकेका हुन्छन् । अर्थात् ईमान भएका लागि त अल्लाहका सत्कर्मी भक्त, अल्लाहको आदेशले सिफारिश गर्ने छन् अर्थात सिफारिश अनिष्ठ तथा मूर्तिपूजकहरूको लागि हुनेछैन तथा यो सिफारिश ती ईमानवालाहरूको लागि हुनेछ जसबाट कुनै पाप भयो, परन्तु उनीहरू अल्लाह एक हुने कुरोमा पूर्ण विश्वास गरिराखेको होलान् । यसप्रकार दुबै आयतहरूमा कुनै मदभेद पनि रहँदैन ।

अन्यथा तपाईं अनर्थ कार्य गर्नेहरूमा पर्नु हुनेछ ।[1]

(५३) यसैप्रकार हामीले उनीहरूलाई परस्पर परीक्षामा पारिदियौं ताकि यो भनुन् कि के अल्लाहले हामी मध्येबाट छानी उनीमाथि उपकार गरेको छ ।[2] के यो कुरो होइन कि अल्लाह कृतज्ञता व्यक्त गर्नेहरूलाई राम्ररी जान्दछ ।[3]

وَكَذَٰلِكَ فَتَنَّا بَعْضَهُم بِبَعْضٍ لِّيَقُولُوٓا۟ أَهَٰٓؤُلَآءِ مَنَّ ٱللَّهُ عَلَيْهِم مِّنۢ بَيْنِنَآ ۗ أَلَيْسَ ٱللَّهُ بِأَعْلَمَ بِٱلشَّٰكِرِينَ ﴿٥٣﴾

[1]अर्थात् यी असहाय, निर्धन मुसलमान जो बडो नि:स्वार्थ भावले रातदिन आफ्नो प्रभुलाई पुकार्दछन् अर्थात् त्यसको इबादत (आराधना) गर्दछन् । तपाईं मूर्तिपूजकहरूका यी कुरा तथा मागहरूमा कि हे मुहम्मद ! (सल्लल्लाहु अलैहि वसल्लम) तिम्रो निकटमा त निर्धन तथा भिखारीहरूकै भीड लागिरहन्छ, यदि तिमीले उनीहरूलाई हटाउँछौ भने हामी पनि तिम्रो पासमा बसौं, यी निर्धनहरूलाई आफूबाट टाढा नगर्नू, विशेषरूपले जबकि तपाईंको हिसाबको उनीसित सम्बन्ध छैन तथा उनको तपाईंसित सम्बन्धित छैन । (यदि तपाईं यस्तो गर्नुहुनेछ भने अत्याचार हुनेछ जुन तपाईं सल्लल्लाहु अलैहि वसल्लममा मान-सम्मानको अनुरूप छैन । उद्देश्य समुदायलाई सम्झाउनु थियो कि असहाय मानिसहरूलाई तुच्छ ठान्नु उनको संगतबाट बच्नु तथा उनीसित सम्बन्ध नराख्नु, यो अज्ञानीहरूको काम हो, ईमानवालाहरूको होइन । ईमानवाला त ईमानवालाहरूसित प्रेम गर्दछन्, चाहे उनी निर्धन अथवा भिखारी नै किन नहुन् ।

[2]प्रारम्भमा अधिकतर निर्धन अथवा दास मानिसहरू नै मुसलमान भएका थिए, यसकारण यही कुरो धनवान काफिरहरूको परीक्षाको कारण बन्यो तथा उनीहरू यी निर्धनहरूको उपहास गर्दथे तथा जसमाथि उनको नियन्त्रण थियो तिनलाई उनीहरूले कष्ट पनि दिन्थे तथा भन्थे कि के यिनै मानिसहरू हुन्, जसमाथि अल्लाहले उपकार गरेको छ ? उनीहरूको तात्पर्य यो हुन्थ्यो कि ईमान तथा इस्लाम यदि वास्तवमा अल्लाहको उपकार भएको भए यो सर्वप्रथम हामीमाथि हुन्थ्यो जुन प्रकार अन्य स्थानहरूमा भनेको छ ।

﴿لَوْ كَانَ خَيْرًا مَّا سَبَقُونَآ إِلَيْهِ﴾

"यदि यो राम्रो कुरा भएको भए यसलाई स्वीकार गर्नमा हामीभन्दा अगाडि हुँदैनथे ।"(सूरःअल-अहक़ाफ-११)

अर्थात् हीनहरूको सापेक्ष हामी पहिला मुसलमान हुन्थ्यौं ।

[3]अर्थात् अल्लाह तआ़ला वाह्य चमक, भेष-भूषा तथा वैभवलाई हेर्दैन । त्यो त हृदयको अवस्थालाई हेर्छ तथा त्यसैबाट जान्दछ कि कृतज्ञ तथा सच्चा भक्त को हुन् ?

وَإِذَا جَآءَكَ ٱلَّذِينَ يُؤْمِنُونَ بِـَٔايَـٰتِنَا فَقُلْ سَلَـٰمٌ عَلَيْكُمْ ۖ كَتَبَ رَبُّكُمْ عَلَىٰ نَفْسِهِ ٱلرَّحْمَةَ ۖ أَنَّهُۥ مَنْ عَمِلَ مِنكُمْ سُوٓءًۢا بِجَهَـٰلَةٍ ثُمَّ تَابَ مِنۢ بَعْدِهِۦ وَأَصْلَحَ فَأَنَّهُۥ غَفُورٌ رَّحِيمٌ ﴿٥٤﴾

(५४) तथा तपाईं छेउ जब उनीहरू आउँछन् जो हाम्रा आयतहरूप्रति विश्वास राख्छन् त भनिदिनुस्, "तिमी सुरक्षित रह ।"[१] तिम्रो पालनकर्ताले आफूमाथि कृपा अनिवार्य गरिसकेको छ ।[२] कि तिमीमध्येबाट जसले मूर्खताले दुराचार गऱ्यो अनि तत्पश्चात क्षमा-याचना एवं सुधार गऱ्यो त अल्लाह क्षमाशील तथा कृपालु छ ।[३]

وَكَذَٰلِكَ نُفَصِّلُ ٱلْـَٔايَـٰتِ وَلِتَسْتَبِينَ سَبِيلُ ٱلْمُجْرِمِينَ ﴿٥٥﴾

(५५) यसैप्रकार हामी आफ्ना आयतहरूको विस्तृत वर्णन गर्दछौं ताकि अपराधीहरूलाई मार्ग स्पष्ट हुन सकोस् ।

---

[१]अत: उसले जसमा कृतज्ञता देख्यो त्यसलाई ईमानको गुणले सुसज्जित गरिदियो, जुन प्रकार हदीसमा वर्णित छ, "अल्लाह तआला तिम्रो रूप तथा धन हेर्दैन, त्यो त तिम्रो कर्म हेर्दछ ।" (सहीह मुस्लिम किताबुल बिर्र बाब तहरीमि, जुल्मिल मुस्लिमे व ख़जलेहि व एहतकारेहि व दमेहि व इर्जेहि)

إِنَّ اللّٰهَ لَا يَنْظُرُ إِلىٰ صُوَرِكُم وَلَا إِلىٰ أَلْوَانِكُمْ وَلٰكِنْ يَنْظُرُ إِلىٰ قُلُوبِكُمْ وَأَعْمَالِكُمْ

"अल्लाह तआला तिम्रा रूप र रङ्गहरू हेर्दैनन् बरू तिम्रा हृदय तथा कर्महरूलाई हेर्दछ ।" (सहीह मुस्लिम र मुसनद अहमद २२८५ तथा ५३९, इब्ने माअज किताबुल जुहद, बाबुल क़नाआ:)

[२]अर्थात् उनलाई सलाम गरी अथवा उनलाई सलामको उत्तर दिएर सम्मानित गर्नुस् ।

[३]तथा उनीहरूलाई शुभ-सूचना दिनुस् कि अल्लाहले आफ्नो दया एवं अनुग्रहले आफ्ना कृतज्ञ भक्तहरूमाथि उपकार गर्न निर्णय गरिसकेको छ । जुनप्रकार हदीसमा वर्णित छ कि जब अल्लाह तआलाले सृष्टिको रचना गऱ्यो तब त्यसले अर्शमाथि लेखिदियो । (إِنَّ رَحْمَتِي تَغْلِبُ غَضَبِي) "मेरो कृपा मेरो क्रोधमाथि प्रभावशाली छ ।" (सहीह मुस्लिम तथा बुख़ारी)

[४]यसमा पनि ईमानवालाहरूको लागि शुभ-सूचना छ किनभने उनीहरूकै यो गुण हो कि यदि अज्ञानवश अथवा मानव अभियाचनाले कुनै पाप गर्दछन् त तुरून्त क्षमा माँग्दछन् तथा आफ्नो सुधार गर्दछन् । पापको पुनरावृत्ति गर्दैनन् ।

قُلْ إِنِّي نُهِيتُ أَنْ أَعْبُدَ الَّذِينَ تَدْعُونَ مِن دُونِ اللَّهِ ۚ قُل لَّا أَتَّبِعُ أَهْوَاءَكُمْ ۙ قَدْ ضَلَلْتُ إِذًا وَمَا أَنَا مِنَ الْمُهْتَدِينَ ﴿٥٦﴾

(५६) (तपाईं) भन्नुस् कि तिमीहरू अल्लाह बाहेक जसलाई पुकार्दछौ, तिनको उपासनाबाट मलाई रोकिएको छ । तपाईं भनिदिनुस् कि म तिमीहरूका इच्छाको अनुपालन गर्दिन, किनभने त्यस अवस्थामा म कुपथ हुनेछु तथा सत्य मार्गमा रहने छैन ।[1]

قُلْ إِنِّي عَلَىٰ بَيِّنَةٍ مِّن رَّبِّي وَكَذَّبْتُم بِهِ ۚ مَا عِندِي مَا تَسْتَعْجِلُونَ بِهِ ۚ إِنِ الْحُكْمُ إِلَّا لِلَّهِ ۖ يَقُصُّ الْحَقَّ ۖ وَهُوَ خَيْرُ الْفَاصِلِينَ ﴿٥٧﴾

(५७) (तपाईं) भन्नुस् कि मेरो पासमा मेरो प्रभुको तर्फबाट एउटा प्रमाण छ ।[2] तथा तिमी त्यसलाई असत्य भन्छौ, जुन कुरोको तिमी शीघ्रता गरिराखेका छौ त्यो मेरो पासमा छैन । अल्लाह बाहेक कसैको आदेश छैन ।[3] अल्लाह तआ़ला वास्तविक कुरालाई बताउँछ ।[4] तथा त्यही सर्वश्रेष्ठ निर्णायक छ ।

[1]अर्थात् यदि म पनि तिमीजस्तै अल्लाहको इबादत (आराधना) को सट्टा तिम्रा इच्छाहरूका अनुसार अल्लाहका अतिरिक्त अन्यको इबादत गर्न प्रारम्भ गर्दछु भने अवश्य म विचलित हुनेछु । अर्थ यो हो कि अल्लाहको अतिरिक्त अन्यको पूजा तथा उपासना गर्नु सबभन्दा ठूलो विचलन हो, परन्तु दूर्भाग्यको यो विचलन त्यतिनै सामान्य छ, यहाँसम्मकि मुसलमानहरूको एउटा गुट यसमा लिप्त छ । (هداهم الله تعالى)

[2]तात्पर्य ती धार्मिक नियम हुन् जुन प्रकाशनाहरू (ईशवाणी) द्वारा उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि अवतरित गरिए, जसमा एकेश्वरवादलाई प्राथमिकता प्राप्त छ ।

[3]सम्पूर्ण सृष्टिमाथि अल्लाहकै आदेश चल्छ तथा सबै समस्याहरूका समाधान त्यसैका हातमा छन् । यसकारण तिमी जे चाहन्छौ कि अल्लाहको प्रकोप शीघ्र नै आओस् ताकि तिमीलाई मेरो सत्यता अथवा मेरो झूठबारे थाहा होस् त यो पनि अल्लाहको वशमा छ, त्यो यदि चाहन्छ भने तिम्रो इच्छा अनुसार शीघ्र नै प्रकोप पठाएर तिमीलाई सतर्क गर्नसक्छ अथवा नष्ट गर्नसक्छ तथा चाहेको खण्डमा त्यस समयसम्म तिमीलाई अवसर दिनसक्छ जबसम्म त्यो चाहन्छ ।

[4](يقص) "क़सस" धातुले बनेको हो जसको अर्थ हो वर्णन गर्नु अथवा (قص أثر) कसैको पछाडि लाग्नु तथा अनुसरण गर्नुबाट लिइएको छ जसको अर्थ यो हो कि सत्य उसको निर्णयमा नै निहित छ ।

قُلْ لَّوْ اَنَّ عِنْدِىْ مَا تَسْتَعْجِلُوْنَ بِهٖ لَقُضِىَ الْاَمْرُ بَيْنِىْ وَبَيْنَكُمْ ط وَاللّٰهُ اَعْلَمُ بِالظّٰلِمِيْنَ ﴿٥٨﴾

(५८) तपाईं भनिदिनुस् कि यदि मसँग त्यो कुरो जसको तिमी माँग गरिराखेका छौ, भएको भए मेरो र तिम्रो बीच (विवादको) निर्णय भइसक्ने थियो ।[1] तथा अल्लाह पापीहरूलाई राम्ररी जान्दछ ।

وَعِنْدَهٗ مَفَاتِحُ الْغَيْبِ لَا يَعْلَمُهَآ اِلَّا هُوَ ط وَيَعْلَمُ مَا فِى الْبَرِّ وَ الْبَحْرِ ط وَمَا تَسْقُطُ مِنْ وَّرَقَةٍ اِلَّا يَعْلَمُهَا وَلَا حَبَّةٍ فِىْ ظُلُمٰتِ الْاَرْضِ وَلَا رَطْبٍ وَّلَا يَابِسٍ

(५९) तथा त्यसै (अल्लाह) को पासमा परोक्षका साँचाहरू छन्, जसलाई मात्र त्यही जान्दछ तथा जे जल एवं थलमा छ ती सबैलाई जान्दछ तथा जुन पात खस्दछ त्यसलाई पनि जान्दछ तथा धर्तीका अन्धकारहरूमा कुनै पनि अन्नको दाना होस्

[1]अर्थात् यदि अल्लाह तआ़ला मेरो माँग पश्चात तुरून्त प्रकोप पठाइदिन्थ्यो अथवा अल्लाह तआ़लाले मेरो वशमा यो कुरो दिएको भए त तिम्रो इच्छा अनुसार प्रकोप पठाएर निर्णय गरिन्थ्यो परन्तु यो काम पूर्णरूपले अल्लाहको इच्छामा आधारित छ, यसकारण यो अधिकार मलाई दिएको छैन तथा न यो सम्भव छ कि मेरो प्रार्थनामा तुरून्त प्रकोप पारिदियोस् ।

**आवश्यक स्पष्टीकरणः** (ताएफको घटना हो) हदीसमा वर्णित छ कि एक अवसरमा अल्लाहको आदेशमा पर्वतहरूको फरिश्ता नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भयो तथा उसले भन्यो कि "यदि तपाईं सल्लल्लाहु अलैहि वसल्लमले मलाई आदेश दिनुहुन्छ भने म सम्पूर्ण आबादीलाई दुबै पर्वतहरूको बीचमा किचिदिन्छु ।" उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "होइन, अपितु मलाई आशा छ कि अल्लाह तआ़ला उनको वंशमा अल्लाहको इबादत गर्ने व्यक्ति पैदा गर्दछ, जो उसको साथमा कसैलाई पन सम्मिलित गर्नेछैन ।" (सहीह बुख़ारी किताबु वदइल ख़लके, बाब इज़ा क़ाल अहदोकुम अमीन वल मलायेकः फिस्समा ऐ र सहीह मुस्लिम किताबुल जिहाद, बाब मालकेयन्नबी (सल्लल्लाहु अलैहि वसल्लम) मिन अज़ल मुशरिकीन) यो हदीस प्रस्तुत आयतको व्याख्याको विरूद्ध छैन, जस्तो कि प्रकट भइराखेको छ । यसकारण कि आयतमा प्रकोपको माँगमा प्रकोप दिनुको प्रदर्शन भइराखेको छ । यस हदीसमा मूर्तिपूजकहरूको माँग बिना, केवल उनले कष्ट दिनुको कारण उनीमाथि प्रकोप पठाउनुको विचार प्रदर्शित गरिदैछ जसलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमले स्वीकार गर्नु भएन ।

إِلَّا فِي كِتَٰبٖ مُّبِينٖ ٥٩

र कुनै पनि चिसो (गिलो) र शुष्क (सुख्खा) कुरो होस् त्यो निश्चय नै एउटा स्पष्ट किताबमा मौजुद छ ।[1]

وَهُوَ ٱلَّذِي يَتَوَفَّىٰكُم بِٱلَّيۡلِ وَيَعۡلَمُ مَا جَرَحۡتُم بِٱلنَّهَارِ ثُمَّ يَبۡعَثُكُمۡ فِيهِ لِيُقۡضَىٰٓ أَجَلٞ مُّسَمّٗىۖ ثُمَّ إِلَيۡهِ مَرۡجِعُكُمۡ ثُمَّ يُنَبِّئُكُم بِمَا كُنتُمۡ تَعۡمَلُونَ ٦٠

(६०) त्यही (अल्लाह) हो, जो रात्रिमा तिमीलाई मृत्यु (निन्द्रा) दिन्छ[2] तथा दिनमा जे-जति पनि गर्छौ, जान्दछ[3] अनि तिमीलाई त्यसमा एक निर्धारित अवधि पूरा गर्नको लागि जागृत गर्दछ ।[4] अनि तिमीलाई उसैतिर फर्केर जानु पर्नेछ ।[5] अनि जे तिमी गर्दै आइराखेका छौ त्यसबारे तिमीलाई भनिदिनेछ ।

وَهُوَ ٱلۡقَاهِرُ فَوۡقَ عِبَادِهِۦۖ وَيُرۡسِلُ عَلَيۡكُمۡ حَفَظَةً حَتَّىٰٓ إِذَا جَآءَ أَحَدَكُمُ ٱلۡمَوۡتُ تَوَفَّتۡهُ رُسُلُنَا وَهُمۡ

(६१) त्यही आफ्ना भक्तहरूमाथि प्रभावशाली छ तथा तिमीमाथि संरक्षक (फरिश्ताहरू) पठाउँछ यहाँसम्मकि जब तिमीमध्ये कसैको मृत्यु (को समय) आउँछ

[1]"किताब मोबीन" सित तात्पर्य "सुरक्षित पुस्तक" हो । यस आयतबाट पनि ज्ञान भयो कि परोक्षको ज्ञान मात्र अल्लाहलाई नै छ । सबै अप्रत्यक्षको कोष उसैको पासमा छ । यसकारण कृतघ्न, मूर्तिपूजक तथा विरोधीहरूमाथि कतिखेर प्रकोप पारिने भन्ने ज्ञान पनि अल्लाहलाई नै छ, तथा त्यही आफ्नो इच्छा अनुसार यसको निर्णय गर्दछ । हदीसमा वर्णन छ कि भेद (परोक्ष) का कुराहरू पाँचवटा छन् । (१) केयामतको ज्ञान, (२) वर्षाको आगमन, (३) माताको गर्भमा पोषित भइराखेको बच्चा (४) भोलि भविष्यमा हुने घटना तथा (५) मृत्यु कुन स्थान मा आउने छ । यी पाँचैवटा कुराहरूको ज्ञान मात्र अल्लाहलाई नै छ ।" सहीह बुख़ारी तफसीर सूरः अल-अनाम)

[2]यहाँ निद्रालाई मृत्यु भनिएको छ, यसकारण यसलाई "सानो मृत्यु" तथा मृत्युलाई ठूलो मृत्यु" भनिएको छ । मृत्युको स्पष्टीकरणको लागि हेर्नुस् सूरः आले इमरान आयत संख्या ५५ को व्याख्या)

[3]अर्थात् दिनको समय आत्मा वापस गरी जीवित पारिदन्छ ।

[4]अर्थात् यो रात्रि-दिवसको क्रम तथा लघु मृत्युको पश्चात जीवित हुने क्रममा मृत्युसम्म निरन्तर रहने छ ।

[5]अर्थात् फेरि केयामतका दिन जीवित भई सबैलाई अल्लाहको दरबारको समक्ष उपस्थित रहनु पर्नेछ ।

لَا يُفَرِّطُونَ ﴿٦١﴾

भने हाम्रा यमदूत त्यसको प्राण निकाल्छन् र उनी अलिकति पनि आलस्य गर्दैनन् ।[1]

ثُمَّ رُدُّوٓا إِلَى ٱللَّهِ مَوْلَىٰهُمُ ٱلْحَقِّ ۚ أَلَا لَهُ ٱلْحُكْمُ وَهُوَ أَسْرَعُ ٱلْحَٰسِبِينَ ﴿٦٢﴾

(६२) अनि उनीहरू आफ्नो सत्य स्वामी (अल्लाह) को पासमा ल्याइने छन् ।[2] सावधान, उसैको आदेश चल्नेछ तथा त्यसले अति शीघ्र हिसाब लिनेछ ।

قُلْ مَن يُنَجِّيكُم مِّن ظُلُمَٰتِ ٱلْبَرِّ وَٱلْبَحْرِ تَدْعُونَهُۥ تَضَرُّعًا وَخُفْيَةً لَّئِنْ أَنجَىٰنَا مِنْ هَٰذِهِۦ لَنَكُونَنَّ مِنَ ٱلشَّٰكِرِينَ ﴿٦٣﴾

(६३) तपाईं भन्नुस् कि को छ जसले थल र जलका अन्धकारहरूबाट तिमीलाई छुटकारा प्रदान गर्दछ, जसलाई तिमी विन्ति गर्दछौ र विस्तारै पुकार्दछौ कि यदि हामीलाई यसबाट बचायौ भने हामी अवश्य कृतज्ञ हुनेछौं ?

قُلِ ٱللَّهُ يُنَجِّيكُم مِّنْهَا وَمِن كُلِّ كَرْبٍ ثُمَّ أَنتُمْ تُشْرِكُونَ ﴿٦٤﴾

(६४) तपाईं स्वयं भन्नुस कि यसबाट तथा प्रत्येक विवादबाट तिमीलाई अल्लाह नै बचाउँछ, तैपनि तिमी नै मिश्रण (शिर्क) गर्दछौ ।

[1]अर्थात् आफ्नो यस कर्तव्यको पालन तथा आत्माको सुरक्षामा, बरू यो फरिश्ता, मर्ने यदि पुण्य गर्ने व्यक्ति छ भने उसको आत्मालाई श्रेष्ठ स्थानमा तथा यदि कुकर्मी छ भने यातनाको स्थानमा पठाइदिन्छ ।

[2]आयत (मन्त्र) मा ( رُدُّوا ) (फर्काइनेछन्) लाई केहीले यमदूतहरूसित सम्बन्धित मानेका छन् अर्थात् उनी प्राण निकालेर अल्लाहतिर फर्केर जान्छन् । केही व्याख्याकारहरूले साधारण मानिसहरूतिर सर्वनामलाई फर्काए र यो अर्थ लिएका छन् कि जब मानिसहरू एकत्रित भई अल्लाहको सदनमा न्यायको लागि ल्याइनेछन् अनि त्यसले सबैको निर्णय गर्नेछ । आयतबाट विदित हुन्छ कि यमदूत कैयन छन् किनभने उनका लागि बहुवचनको प्रयोग गरिएको छ । केही व्याख्याकारहरूले भनेछन् कि यमदूत त वास्तवमा एक छ किन्तु त्यसका सहायक धेरै छन् । यसकारण बहुवचनको प्रयोग गरिएको छ तथा जुन आयतमा यमदूत एक भनिएको छ, त्यो यसकारण कि प्राण लिएर त्यही नै आकाशहरूमा जान्छ (तफ़सीर रूहुल मआनी) इमाम शौकानी एवं साधारणतः विद्वानहरूको कथन छ कि यमदूत एउटै छ तथा बहुवचनको प्रयोग त्यसका सहायकहरू सहित गरिएको छ । केही कथनहरूमा यमदूतको नाम इज्राईल भनिएको छ । (तफ़सीर इब्ने कसीर अलिफ. लाम. मीम. सजदः)

قُلْ هُوَ الْقَادِرُ عَلَىٰٓ أَن يَبْعَثَ عَلَيْكُمْ عَذَابًا مِّن فَوْقِكُمْ أَوْ مِن تَحْتِ أَرْجُلِكُمْ أَوْ يَلْبِسَكُمْ شِيَعًا وَيُذِيقَ بَعْضَكُم بَأْسَ بَعْضٍ ۗ انظُرْ كَيْفَ نُصَرِّفُ الْآيَاتِ لَعَلَّهُمْ يَفْقَهُونَ ﴿٦٥﴾

(६५) तपाईं भनिदिनुस् कि त्यही तिमीलाई तिम्रो माथिबाट कुनै प्रकोप पठाउन[1] अथवा तिम्रो खुट्टा मुनिबाट[2] पठाउन अथवा तिमीलाई अनेक गिरोहमा बनाएर परस्पर लडाईंको स्वाद चखाउन सामर्थ्य राख्दछ ।[3] तपाईं हेर्नुस् कि हामी विभिन्न प्रकारले कसरी कुराहरू (आयतहरू) को वर्णन गरिराखेका छौं ताकि उनीहरू बुझ्न सकुन् ।

وَكَذَّبَ بِهِ قَوْمُكَ وَهُوَ الْحَقُّ ۚ قُل لَّسْتُ عَلَيْكُم بِوَكِيلٍ ﴿٦٦﴾

(६६) तथा तपाईंको समुदायले त्यसलाई[4] असत्य भन्यो जबकि त्यो सत्य छ, तपाईं भनिदिनुस् कि

[1]आकाशबाट जसरी वर्षाको अधिकता अथवा वायु तथा पत्थरद्वारा प्रकोप अथवा अधिकारीहरूको तर्फबाट अत्याचार एवं क्रुरता ।

[2]जस्तै धाँसिनु, तूफान, बाढी, जसमा सबै कुरा डुब्छ अथवा तात्पर्य छ कि अधीनस्थ कर्मचारी, दास तथा नोकरहरूको तर्फबाट प्रकोप कि उनी विश्वासघाती तथा अपभोगी बनुन् ।

[3]तिम्रो समस्याहरूलाई मिला-जुला अथवा सन्देहास्पद बनाइदेओस् जसको कारण तिमी गुटहरूमा विभक्त होउ तथा तिम्रो एक गुटले अर्को गुटको हत्या गरोस् । यसप्रकार प्रत्येक गुटलाई लडाईंको स्वाद चखाओस् । (ऐसरुत्तफ़ासीर) हदीसमा वर्णित छ, नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि मैले अल्लाह तआ़लासित तीन प्रार्थना गरे । (१) मेरो अनुयायीहरूलाई डुबाएर नमारियोस् । (२) सामान्य रूपले अनिकाल पारी उनलाई नष्ट नगरियोस् । (३) र आपसमा यिनको झगडा नहोस् । अल्लाहले प्रथम दुई प्रार्थनाहरूलाई स्वीकार गर्‍यो परन्तु अन्तिमबाट मलाई रोकिदियो । (सहीह मुस्लिम संख्या २२१६) अर्थात् अल्लाह तआ़लालाई यो ज्ञान थियो कि मुसलमानहरूमा मतभेद हुनेछ तथा कैयौं गुटहरूमा विभक्त हुनेछन् तथा त्यसको कारण अल्लाहको अवज्ञा तथा कुरआन हदीसको इन्कार हुनेछ, जसको परिणामस्वरूप प्रकोपबाट मुसलमान पनि सुरक्षित रहन सक्ने छैनन् । अर्थात् यसको सम्बन्ध अल्लाहको त्यस आदेशसित छ जुन समुदायको चरित्र तथा कर्मको विश्वासमा सदैव रहेको छ, जसमा परिवर्तन सम्भव छैन ।
﴿فَلَن تَجِدَ لِسُنَّتِ اللَّهِ تَبْدِيلًا ۖ وَلَن تَجِدَ لِسُنَّتِ اللَّهِ تَحْوِيلًا﴾ (सूरः फ़ातिर ४३)

[4](بِهِ) (अरबी शब्द) को संकेत कुरआन हो अथवा प्रकोप । (फ़तहुल क़दीर)

म तिमीमाथि अधिकारी होइन ।[1]

لِكُلِّ نَبَإٍ مُّسْتَقَرٌّ ۚ وَسَوْفَ تَعْلَمُونَ ﴿٦٧﴾

(६७) प्रत्येक भविष्यवाणीको एक निश्चित समय छ तथा तिमी शीघ्र नै जान्ने छौ ।

وَإِذَا رَأَيْتَ الَّذِينَ يَخُوضُونَ فِي آيَاتِنَا فَأَعْرِضْ عَنْهُمْ حَتَّىٰ يَخُوضُوا فِي حَدِيثٍ غَيْرِهِ ۚ وَإِمَّا يُنسِيَنَّكَ الشَّيْطَانُ فَلَا تَقْعُدْ بَعْدَ الذِّكْرَىٰ مَعَ الْقَوْمِ الظَّالِمِينَ ﴿٦٨﴾

(६८) तथा जब तपाईं तिनीहरूलाई देख्नुहुन्छ जो हाम्रा आयतहरूमा टीका-टिप्पणी गरिराखेका छन्, त उनीहरूसित अलग्ग रहनुहोस्, यहाँसम्मकि उनी अन्य काममा लागून् तथा यदि तपाईंलाई शैतानले भुलावामा पारिदिए पनि याद आए पश्चात फेरि यस्ता अत्याचारीहरूसँग नबस्नूस् ।[2]

وَمَا عَلَى الَّذِينَ يَتَّقُونَ مِنْ حِسَابِهِم مِّن شَيْءٍ وَلَٰكِن ذِكْرَىٰ لَعَلَّهُمْ يَتَّقُونَ ﴿٦٩﴾

(६९) तथा जो संयमी छन् उनीमाथि उनको पकडको कुनै प्रभाव हुनेछैन ।[3]

---

[1]अर्थात् मलाई यो कार्य पूर्ण गर्नको निम्ति निर्धारित गरिएको छैन कि म तिमीलाई सोझो मार्गमा लगाएर नै छाडूँ बरू मेरो काम केवल धर्मतिर आमन्त्रित गर्नु तथा सतर्क गर्नु हो ﴿فَمَن شَاءَ فَلْيُؤْمِن وَمَن شَاءَ فَلْيَكْفُرْ﴾ अर्थात् जो चाहन्छ विश्वास गरोस् अथवा जो चाहन्छ अविश्वास गरोस् । (सूर:अल-कहफ)

[2]यस आयतमा यद्यपि सम्बोधित नबी सल्लल्लाहु अलैहि वसल्लमलाई गरिएको छ किन्तु यसबाट सम्बोधित प्रत्येक मुसलमान छ। यो अल्लाहको बलपूर्वक आदेश हो जसलाई पवित्र कुर्आनमा कैयन् स्थानहरूमा बर्णित गरिएको छ । सूर: निसा आयत नं. १४० मा पनि यस विषयको चर्चा आइसकेको छ। यसबाट प्रत्येक यस्तो सभा तात्पर्य छ जसमा अल्लाह एवं रसूलका आदेशहरूको उपहास गरिएको हुन्छ अथवा व्यवहारिक रूपले तिनको अवहेलना गरिएको हुन्छ अथवा धर्म-भ्रष्ट आफ्नो कष्ट कल्पनाहरूद्वारा आयत (पवित्र कुर्आनका मन्त्रहरू) का अर्थहरूलाई छिन्नभिन्न गरिराखेका होऊन् । यस्ता सभाहरूमा आलोचना एवं सत्यको सहायता लिनु उचित छ, अन्यथा घोर पाप एवं अल्लाहको क्रोधको कारण छ ।

[3](مِنْ حِسَابِهِم) को सम्बन्ध उनीहरूसित छ, जो अल्लाहका आयतहरूको उपहास गर्दछन्, जुन मानिसहरू यस्ता सभाबाट बच्नेछन्, तिनीहरू अल्लाहका आयतहरूको उपहासको दण्डबाट सुरक्षित रहनेछन् ।

यदि छ भने त्यो स्मरण गराउनुको हो ताकि उनीहरू तर्सुन् ।[१]

(७०) तथा यस्ता मानिसहरूसित कदापि सम्बन्ध नराख्नुस्, जसले आफ्ना धर्मलाई खेल बनाएका छन् तथा सांसारिक जीवनले उनीहरूलाई धोकामा पारिदिएको छ तथा यस कुर्आनद्वारा शिक्षा पनि दिंदैरहनुस ताकि कोही व्यक्ति आफ्नो कर्मको कारण यसप्रकार नअल्भोस् ।[२] कि कोही अल्लाहको अतिरिक्त उसको न सहायता गर्ने होस् तथा न सिफारिश गर्ने तथा यो अवस्था होस् कि यदि संसारभरकै कुरा देओस् तैपनि त्यसलाई नलिइयोस् ।[३] यस्ता नै हुन् कि आफ्ना कर्महरूका कारण अल्भे, उनीहरूको लागि

وَذَرِ الَّذِينَ اتَّخَذُوا دِينَهُمْ لَعِبًا وَلَهْوًا وَغَرَّتْهُمُ الْحَيَوٰةُ الدُّنْيَا وَذَكِّرْ بِهِۦٓ أَن تُبْسَلَ نَفْسٌۢ بِمَا كَسَبَتْ لَيْسَ لَهَا مِن دُونِ اللَّهِ وَلِيٌّ وَلَا شَفِيعٌ وَإِن تَعْدِلْ كُلَّ عَدْلٍ لَّا يُؤْخَذْ مِنْهَآ أُولَٰٓئِكَ الَّذِينَ أُبْسِلُوا بِمَا كَسَبُوا لَهُمْ شَرَابٌ مِّنْ حَمِيمٍ وَعَذَابٌ أَلِيمٌۢ بِمَا كَانُوا يَكْفُرُونَ ﴿٧٠﴾

[१]अर्थात् बचाव तथा विलगावको साथै यदि शिक्षा-दीक्षा एवं पुण्यको आदेश दिने तथा कुकर्मबाट रोक्नुको कर्तव्य यथासम्भव पूरा गर्दछन् भने त सम्भव छ कि उनी यस दुष्कर्मबाट रोकिइन् ।

[२](بَسْلٌ) (बसल) को वास्तविक अर्थ "मना गर्नु" हो, परन्तु यहाँ यसका अनेक अर्थ गरिएका छन् (१) (تُسْلَمُ) "सुम्पिइउन् ।" (२) (تفضح) (तुफ़जहु) "अपमानित गरिदेओस् ।" (३) (تجازى) (तुजाज) "प्रतिफल प्रदान गरियोस् ।" तथा (४) (تُؤاخذُ) (तुआखजु) "समातिओस् ।" इमाम इब्ने क़सीर भन्नुहुन्छ कि सबैको अर्थ लगभग एकै हो सारांश यो हो कि उनीहरूलाई यस कुर्आनद्वारा शिक्षा दिइयोस् । यस्तो नहोस् कि स्वयं आफूलाई जुन उसले कमायो त्यसको साटो विनाशमा पारियोस् अथवा अपमान उनको भाग्य नबनोस् अथवा हिसाबमा उनको पकड होस् । यी सबै भावनाहरूलाई लिएर अनुवाद "फँसिनहालून् भन्ने गरिएको छ ।"

[३]संसारमा कोही व्यक्ति सामान्यतया कुनै मित्रको सहायता अथवा कुनै सिफारिश अथवा धन दिनको कारण मुक्त हुन्छ । परन्तु आख़िरतमा यी तीनटै साधन काम आउने छैनन् । त्यहाँ क़ाफिरहरूको सहायता गर्ने कोही हुनेछैन जसले अल्लाहको पक्‌डबाट बचाउन सकोस् तथा न कोही सिफारिश गर्ने हुनेछ जो अल्लाहको यातनाबाट उनीहरूलाई मुक्त गराउन सकोस् तथा न कसैको पासमा बदला (साटो) दिनको लागि केही हुनेछ, यदि मानी पनि हालिन्छ कि छ तैपनि त त्यो स्वीकार गरिने छैन कि त्यो दिएर मुक्त हुनसकोस् ।

स्वयंका कुफ्रका कारण उनीहरूका लागि अत्याधिक तातो पिउने पानी हुनेछ ।

قُلْ أَنَدْعُوا مِنْ دُونِ اللَّهِ مَا لَا يَنْفَعُنَا وَلَا يَضُرُّنَا وَنُرَدُّ عَلَىٰ أَعْقَابِنَا بَعْدَ إِذْ هَدَانَا اللَّهُ كَالَّذِي اسْتَهْوَتْهُ الشَّيَاطِينُ فِي الْأَرْضِ حَيْرَانَ لَهُ أَصْحَابٌ يَدْعُونَهُ إِلَى الْهُدَى ائْتِنَا ۗ قُلْ إِنَّ هُدَى اللَّهِ هُوَ الْهُدَىٰ ۖ وَأُمِرْنَا لِنُسْلِمَ لِرَبِّ الْعَالَمِينَ ﴿٧١﴾

(७१) तपाईं भन्नुस् कि के हामीले अल्लाह बाहेक त्यसलाई पुकारौं जो हाम्रो भलो-कुभलो गर्न नसकोस् तथा अल्लाहको मार्गदर्शन पाए पश्चात त्यसको समान उल्टो फर्कौं, जसलाई शैतानले भुलावामा पारिसकेको हो र त्यो धर्तीमा चकित भई हिंडिराखेको होस्, त्यसका साथी त्यसलाई सही मार्गतिर पुकारिराखेका होऊन् कि हाम्रो पासमा आउ ।[1] तपाईं भन्नुस कि अल्लाहको मार्गदर्शन नै वास्तवमा मार्गदर्शन हो[2] तथा हामीलाई आदेश गरिएको छ कि विश्वको विधाताप्रति आत्मसमर्पण गरौं।

[1]यो त्यस्तो मानिसको उदारहण हो जो विश्वास पछि अविश्वास तथा एकेश्वरवाद पश्चात अनेकेश्वरवादतिर फर्कन्छ। त्यसको उदाहरण यस्तो छ कि त्यो आफ्ना साथीहरूबाट अलग्ग भएर जङ्गलहरूमा चकित भई परेशानीको अवस्थामा भौंतारिराखेको हुन्छ, साथीहरू उसलाई बोलाइराखेका हुन्छन् । परन्तु चकित हुनुको कारण केही पनि नदेखिएको होस्, अथवा जिन्नातहरूको पन्जामा फँस्नुको कारण सही मार्गमा आउन असम्भव होस् ।

[2]अर्थात् जो विश्वास र अद्वैतको मार्ग अपनाए पश्चात भ्रमित भइसकेको छ, त्यो बाटो गुमिएको बटुवा जस्तै सही मार्गमा आउन सक्दैन । परन्तु यदि अल्लाहले उसलाई मार्गमा आउनु भाग्यमा लेखिदिएको छ त अवश्य अल्लाहको आदेशको कारण मार्गदर्शन पाउने छ । किनभने सत्यमार्गमा हिंडाउनु उसैको काम हो । जस्तो अन्य स्थानमा आदेश गरिएको छ ।

﴿إِن تَحْرِصْ عَلَىٰ هُدَاهُمْ فَإِنَّ اللَّهَ لَا يَهْدِي مَن يُضِلُّ ۖ وَمَا لَهُم مِّن نَّاصِرِينَ﴾

“यदि तपाईं उनको मार्गदर्शनका इच्छा राख्नुहुन्छ त अल्लाह जसलाई विपथ गरिदिन्छ, त्यसलाई मार्गदर्शन दिंदैन तथा उसको कोही सहायक छैन ।” (सूर: अन्नहल-३७)

परन्तु यो मार्गदर्शन तथा विचलन त्यसै नियमको आधारमा हुन्छ, जुन अल्लाह तआलाले उसको लागि बनाएको छ । यो होइन कि त्यसै जसलाई चाहन्छ विचलित गरिदिन्छ तथा जसलाई चाहन्छ मार्गदर्शन दिन्छ ।

وَ اَنْ اَقِيْمُوا الصَّلٰوةَ وَاتَّقُوْهُ ؕ وَهُوَ الَّذِيْٓ اِلَيْهِ تُحْشَرُوْنَ ۝٧٢

(७२) तथा नमाज़को स्थापना गर एवं त्यस (अल्लाह) सित तर्स ।[१] त्यो त्यही हो जसतिर तिमी एकत्रित गरिनेछौ ।

وَهُوَ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ بِالْحَقِّ ؕ وَيَوْمَ يَقُوْلُ كُنْ فَيَكُوْنُ ۚ قَوْلُهُ الْحَقُّ ؕ وَلَهُ الْمُلْكُ يَوْمَ يُنْفَخُ فِي الصُّوْرِ ؕ

(७३) उसैले आकाशहरू तथा पृथ्वीलाई यथार्थका साथ सृष्टि गऱ्यो ।[२] तथा जुन दिन[३] भन्नेछ, "भईहाल" तब भइहाल्ने छ । उसको कथन सत्य छ तथा जुन दिन नरसिङ्गा फुकिनेछ ।[४] राज्य मात्र उसैको हुनेछ,

---

[१]यसको अर्थ यो हो कि हामीलाई आदेश दिइएको छ कि सर्वजगतको पालनकर्ताको अधीन रहौं तथा उसित तर्सौं, अल्लाहप्रति विश्वास एवं त्यसको अधीनता स्वीकारे पश्चात सर्वप्रथम आदेश नमाज़को स्थापनाको छ जसबाट नमाज़को महत्व स्पष्ट छ तत्पश्चात संयम अपनाउनुको आदेश छ, किनभने संयम र नम्रता बिना नमाज़को पालन असम्भव छ । ﴿وَإِنَّهَا لَكَبِيرَةٌ إِلَّا عَلَى الْخَاشِعِينَ﴾ (सूरः अल-बक़रः-४५)

[२]सत्यताको साथ अथवा लाभकारी उत्पन्न गऱ्यो अर्थात् उनलाई अकारण एवं व्यर्थ (आमोद-प्रमोदको लागि) सृष्टि गरेन, बरू एक विशेष उद्देश्यले सृष्टिलाई पैदा गऱ्यो तथा त्यो यो हो कि अल्लाहलाई याद राख, तथा कृतज्ञता व्यक्त गरिराख जसले यो सब रचेको छ र वहाँको नै उपासना गर ।

[३] (يَوْمَ) लुप्त क्रिया (وَاذْكُرْ) अथवा (وَاتَّقُوا) सित सम्बन्धित छ । अर्थात् त्यस दिनलाई स्मरण गर अथवा त्यस दिनसित तर्स कि उसको शब्द (कुन) "भईहाल" बाट जे चाहन्छ हुनेछ । यो संकेत हो त्यस कुरातिर कि हिसाब-किताबको कठिन समस्या पनि बडो सरलताले समाधान गरिहालिने छ । परन्तु कुन व्यक्तिहरूको लागि यस्तो हुनेछ ? यो मात्र ईमान्दारको लागि यस्तो हुनेछ । अन्य व्यक्तिहरूको लागि त यो दिन हजार वर्ष अथवा पचास हजार वर्ष जस्तै भारी लाग्नेछ ।

[४](صُوْرٌ) सित तात्पर्य नरसिन्घा अथवा बिगुल छ जसको विषयमा हदीसमा वर्णन छ कि इस्राफ़ील (एक फरिश्ताको नाम) त्यसलाई मुखमा लिई टाउको निहुराई उभेर अल्लाहको आज्ञाको प्रतीक्षा गरिराखेका छन् कि आदेश मिल्नासाथ त्यसमा फुकुन् । (इब्ने क़सीर) । हदीसको पुस्तक तिर्मिजी तथा अबू दाऊदमा छ कि सूर एक नरसिंगा हो (क्रमसंख्या, ४७४२, ४०३०, ३२४४) केही विद्वानहरूको विचार छ कि तीन पटक फुकिने छ । एउटा त्यो जसमा सबै प्राणी अचेत हुनेछन्, दोस्रो जसबाट सबैको विनाश हुनेछ तथा तेस्रो पटक फुकेपछि सबै प्राणी जीवित हुनेछन्, केही विद्वानहरू अन्तको दुईटा फूँक मात्र मान्दछन् ।

عٰلِمُ الْغَيْبِ وَالشَّهَادَةِ ۚ وَهُوَ الْحَكِيمُ الْخَبِيرُ ﴿٧٣﴾

त्यो ज्ञाता छ अदृश्य एवं दृश्यको तथा त्यो सर्वज्ञाता सर्व-सूचित छ ।

وَإِذْ قَالَ إِبْرَاهِيمُ لِأَبِيهِ آزَرَ أَتَتَّخِذُ أَصْنَامًا آلِهَةً ۖ إِنِّي أَرَاكَ وَقَوْمَكَ فِي ضَلَالٍ مُّبِينٍ ﴿٧٤﴾

(७४) तथा स्मरण गर जब इब्राहीमले आफ्नो पिता आज़रसित[1] भन्नुभयो कि के तपाईं मूर्तिहरूलाई पूज्य बनाइराख्नु भएको छ ? म त तपाईं तथा तपाईंको वर्गलाई स्पष्ट मार्ग-विचलनमा देखिराखेको छु ।

وَكَذَٰلِكَ نُرِي إِبْرَاهِيمَ مَلَكُوتَ السَّمَاوَاتِ وَالْأَرْضِ وَلِيَكُونَ مِنَ الْمُوقِنِينَ ﴿٧٥﴾

(७५) तथा यसैप्रकार हामीले इब्राहीमलाई आकाशहरू एवं धर्तीको राज्य (सृष्टि) देखायौ ताकि त्यो पूर्ण-विश्वास गर्नेहरूमा होस् ।[2]

فَلَمَّا جَنَّ عَلَيْهِ اللَّيْلُ رَأَىٰ كَوْكَبًا ۖ قَالَ هَٰذَا رَبِّي ۖ فَلَمَّا أَفَلَ قَالَ لَا أُحِبُّ الْآفِلِينَ ﴿٧٦﴾

(७६) अनि जब त्यसमाथि रात्रि आच्छादित भयो त उसले एउटा तारा देख्यो, भन्यो कि यो मेरो प्रभु हो पछि जब अस्तायो तब भन्यो कि म अस्ताउनेहरूसित माया गर्दिन ।[3]

---

[1]इतिहासकार आदरणीय इब्राहीमका पिताको दुईटा नाम बताउँछन् । यी नामहरू आज़र तथा तारूख़ हुन् । सम्भव छ कि दोस्रो नाम उपाधि होस् । केहीको भनाई छ कि आज़र उहाँको काकाको नाम थियो, यो सही छैन, यसकारण कि क़ुर्आनले आज़रको चर्चा आदरणीय इब्राहीमको पिताको रूपमा गरेको छ । अत: यही नै ठीक छ ।

[2](مَلَكُوتٌ) यो रूप अतिशयवादी हो जस्तै (رَغَبَةٌ) बाट (رَغَبُوت) तथा (رَهبةٌ) बाट (رَهبُوت) । अत: यसबाट तात्पर्य सृष्टि हो । जस्तो कि अनुवादमा यसै विषयलाई अपनाइएको छ । अथवा (ربوبيت) तथा (الوهيت) हो अर्थात् हामीले त्यसलाई त्यो देखायौं तथा त्यसलाई जान्ने सौभाग्य प्रदान गऱ्यौं । अथवा यो अर्थ हो कि आकाशलोकदेखि लिएर पाताल सम्मलाई हामीले इब्राहीमलाई दर्शन गरायौं । (फ़तहुल क़दीर)

[3]अर्थात् अस्ताउने ईष्टदेवहरूसित माया गर्दिन, यसकारण कि अस्ताउने स्थितिको परिवर्तनलाई प्रदर्शित गर्दछ, जो अनित्य छ तथा अनादि हुनुको प्रमाण होइन र जुनकि स्वयं अनित्य छ, त्यो पूज्य हुन सक्दैन ।

فَلَمَّا رَاَ الْقَمَرَ بَازِغًا قَالَ هٰذَا رَبِّيْ ۚ فَلَمَّآ اَفَلَ قَالَ لَئِنْ لَّمْ يَهْدِنِيْ رَبِّيْ لَاَكُوْنَنَّ مِنَ الْقَوْمِ الضَّآلِّيْنَ ﴿٧٧﴾

(७७) अनि जब चन्द्रमालाई चम्किराखेको देख्यो त भन्यो यो मेरो प्रभु हो, अनि जब त्यो अस्त भयो, तब भन्यो कि यदि मेरो स्वामीले मलाई मार्गदर्शन गरेन भने म पथविचलितहरूमा पर्नेछु ।

فَلَمَّا رَاَ الشَّمْسَ بَازِغَةً قَالَ هٰذَا رَبِّيْ هٰذَآ اَكْبَرُ ۚ فَلَمَّآ اَفَلَتْ قَالَ يٰقَوْمِ اِنِّيْ بَرِيْٓءٌ مِّمَّا تُشْرِكُوْنَ ﴿٧٨﴾

(७८) अनि सूर्यलाई चम्किराखेको देख्यो त भन्यो कि यो मेरो प्रभु हो ।[1] यो त सबभन्दा ठूलो छ, पछि जब त्यो अस्त भयो त भन्यो कि निःसन्देह म तिम्रो मिश्रणवादबाट विरक्त छु ।[2]

اِنِّيْ وَجَّهْتُ وَجْهِيَ لِلَّذِيْ فَطَرَ السَّمٰوٰتِ وَ الْاَرْضَ حَنِيْفًا وَّمَآ اَنَا مِنَ الْمُشْرِكِيْنَ ﴿٧٩﴾

(७९) मैले आफ्नो मुख एकाग्र भई त्यसतिर फर्काएँ ।[3] जसले आकाशहरू एवं धर्तीलाई सृष्टि गऱ्यो तथा म मिश्रणवादीहरू (अनेकेश्वरवादीहरू) मध्ये होइन ।

[1]अरबी भाषामा सूर्य स्त्रीलिङ्ग हो परन्तु सांकेतिक संज्ञा पुलिङ्ग हो । तात्पर्य उदय हो अर्थात् उदित सूर्य मेरो पोषक हो, किनभने यो सबभन्दा ठूलो छ, जुन प्रकारले सूर्यका उपासकहरूलाई भ्रम छ, तथा उनीहरू त्यसको उपासना गर्दछन् । आकाशमा सात ठूला ग्रह छन् । सूर्य यी सबैमा ठूलो तथा ज्योतिर्मय छ तथा मनुष्यको जीवनको लागि यसको विशेषता तथा उपयोगिताको विषयमा भन्नुको कुनै आवश्यकता छैन । यसकारण प्रकृतिका उपासकहरूमा सूर्यको उपासना सामान्यरूपले रही आएको छ । आदरणीय इब्राहीम अलैहिस्सलामले बडो सुन्दर विधिले चन्द्रमा तथा सूर्यका उपासकहरूलाई उनका देवताहरूका विवशतालाई स्पष्ट गर्नु भएको छ कि उनी पूजा योग्य किन छैनन् ?

[2]अर्थात् ती सबै वस्तुहरू जसलाई अल्लाहको साझीदार बनाउँछौ अथवा जसको पूजा गर्दछौ, त्यसबाट म दुःखी छु । यसकारण कि यिनमा परिवर्तनशीलता छ, कहिले उदय हुन्छन् कहिले अस्त हुन्छन् जुन यस कुराको प्रमाण हो कि यिनको रचना भएको छ, तथा यिनको रचयिता कोही अरू छ जसका आदेशाहीन यिनीहरू छन्, जबकि यिनी स्वयं कसैको आदेशाहीन छन् ।

[3]मुखको वर्णन यसकारण गरिएको छ कि मेरो आराधना तथा तौहीद (एकेश्वरवाद) को लक्ष्य अल्लाह तआला छ, जो आकाश तथा धर्तीको स्रष्टा हो ।

وَحَاجَّهُ قَوْمُهُ ۚ قَالَ أَتُحَاجُّونِّي فِي اللَّهِ وَقَدْ هَدَانِ ۚ وَلَا أَخَافُ مَا تُشْرِكُونَ بِهِ إِلَّا أَن يَشَاءَ رَبِّي شَيْئًا ۗ وَسِعَ رَبِّي كُلَّ شَيْءٍ عِلْمًا ۗ أَفَلَا تَتَذَكَّرُونَ ﴿٨٠﴾

(८०) तथा उनीसित उनका कौमका मानिसहरू विवाद गर्न थाले ।[1] (आदरणीय इब्राहीम) ले भने कि के तिमी अल्लाहको विषयमा मसित विवाद गर्दछौ यद्यपि उसले मलाई विधि भनिदिएको छ तथा म ती कुराहरूसँग तर्सन्न, जसलाई तिमी अल्लाहसँग सम्मिलित गर्दछौं, परन्तु मेरो पालनकर्ता जे चाहन्छ, त्यही नै पूरा हुन्छ । प्रत्येक वस्तु मेरो प्रभुको ज्ञान परिधि अर्न्तगत पर्दछ । के तिमी तैपनि विचार गर्दैनौ ?

وَكَيْفَ أَخَافُ مَا أَشْرَكْتُمْ وَلَا تَخَافُونَ أَنَّكُمْ أَشْرَكْتُم بِاللَّهِ مَا لَمْ يُنَزِّلْ بِهِ عَلَيْكُمْ سُلْطَانًا ۚ فَأَيُّ الْفَرِيقَيْنِ أَحَقُّ بِالْأَمْنِ ۖ إِن كُنتُمْ تَعْلَمُونَ ﴿٨١﴾

(८१) तथा म त्यस कुरासित कसरी तर्सु जसलाई तिमीले (अल्लाहका) साझेदार बनायौ जबकि तिमी त्यसलाई अल्लाहको साझेदार बनाउनबाट तर्सन्नौ जसको विषयमा तिम्रो पासमा अल्लाहले कुनै तर्क अवतरित गरेको छैन । अब यी दुबै पक्षहरूमा को शान्तिको अधिक योग्य छ ?[2] भन यदि तिमी जान्दछौ ।

[1]जब कौमका मानिसहरूले तौहीद (एकेश्वरवाद) को यो भाषण सुने जसमा उनका (स्वयं कृत) देवताहरूको खण्डन पनि गरिएको थियो, तब उनीहरूले पनि आफ्नो तर्क प्रस्तुत गर्न प्रारम्भ गरे, जसबाट ज्ञान भयो कि मूर्तिपूजकहरूले पनि आफ्नो विश्वासको लागि केही तर्क बनाइसकेका थिए, जसको दर्शन आज पनि गर्न सकिन्छ । जति पनि शिर्कसित लिप्त विश्वास गर्ने व्यक्तिहरू छन्, सबैले आफ्ना अनुयायीहरूलाई सन्तुष्ट गर्नको निम्ति यस्ता मोहराहरू खोजिसकेका छन्, जसलाई उनीहरू तर्क ठान्दछन् अथवा जसबाट केही नभए उनका अनुयायीहरूलाई आफ्नो जालमा फँसाएर राख्न सक्दछन् ।

[2]एकेश्वरवादी एवं मिश्रणवादीहरूमा, एकेश्वरवादीहरूको पासमा त एकेश्वरवादका स्पष्ट प्रमाण छन्, जबकि द्वैतवादीको पासमा अल्लाहको तर्फबाट अवतरित कुनै तर्क छैन । तिनीहरूसित मात्र निर्मूल भ्रम छ अथवा व्यर्थ कल्पनाहरू । यसैबाट अनुमान लगाउन सकिन्छ कि शान्ति एवं मुक्तिको योग्य को हुनेछ ?

ٱلَّذِينَ ءَامَنُوا۟ وَلَمْ يَلْبِسُوٓا۟ إِيمَٰنَهُم بِظُلْمٍ أُو۟لَٰٓئِكَ لَهُمُ ٱلْأَمْنُ وَهُم مُّهْتَدُونَ ﴿٨٢﴾

(८२) जसले विश्वास गरे तथा आफ्नो ईमानलाई कुनै मिश्रणवादसँग लिप्त गरेनन्, उनैको लागि शान्ति छ तथा ती नै सोझो मार्गमा छन् ।[1]

وَتِلْكَ حُجَّتُنَآ ءَاتَيْنَٰهَآ إِبْرَٰهِيمَ عَلَىٰ قَوْمِهِۦ ۚ نَرْفَعُ دَرَجَٰتٍ مَّن نَّشَآءُ ۗ إِنَّ رَبَّكَ حَكِيمٌ عَلِيمٌ ﴿٨٣﴾

(८३) तथा यो हाम्रो तर्क हो जसलाई हामीले इब्राहीमलाई उनको समुदायको तुलनामा दियौं ।[2] हामी जसलाई चाहन्छौं, पदमा वृद्धि गर्दछौं । निःसन्देह तिम्रो स्वामी तत्वदर्शी, सर्वज्ञ छ ।

وَوَهَبْنَا لَهُۥٓ إِسْحَٰقَ وَيَعْقُوبَ ۚ كُلًّا هَدَيْنَا ۚ وَنُوحًا هَدَيْنَا مِن قَبْلُ

(८४) र हामीले उनलाई (इब्राहीमलाई) इसहाक (पुत्र) एवं याकूब (पौत्र) प्रदान गर्‍यौं ।[3] तथा प्रत्येकलाई सोझो बाटो देखायौं ।

[1]यहाँ आयतमा जुल्मसित अभिप्राय मिश्रण हो । जब यो आयत अवतरित भयो त अल्लाहका रसूलका सहचरहरूले यसको साधारण अर्थ (आलस्य, त्रुटि पाप, क्रुरता) बुझे तथा व्याकुल भए र रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भई भन्नथाले कि हामीमध्ये को छ जसले अत्याचार गरेको छ ? उहाँले भन्नुभयो कि यसको अर्थ त्यो अत्याचार होइन जुन तिमीले बुझेका छौ, बरू यसबाट तात्पर्य शिर्क (मिश्रण) छ, जस्तो आदरणीय लुक़मानले आफ्नो पुत्रसित भनेका थिए

﴿إِنَّ ٱلشِّرْكَ لَظُلْمٌ عَظِيمٌ﴾

"निःसन्देह बहुईश्वरवाद सबभन्दा ठूलो अत्याचार हो ।" (सूरः लुक़मान-१३) (सहीह बुख़ारी तफ़सीर सूरः अल अनाम)

[2]अर्थात् अल्लाह तआलाको एक हुने कुराको प्रमाण तथा तर्क जसको कुनै उत्तर इब्राहीमको जातिका व्यक्तिले दिन सकेनन् । तथा त्यो केहीका निकट यो कथन थियो । ﴿وَكَيْفَ أَخَافُ مَآ أَشْرَكْتُمْ وَلَا تَخَافُونَ أَنَّكُمْ أَشْرَكْتُم بِٱللَّهِ مَا لَمْ يُنَزِّلْ بِهِۦ عَلَيْكُمْ سُلْطَٰنًا ۚ فَأَىُّ ٱلْفَرِيقَيْنِ أَحَقُّ بِٱلْأَمْنِ ۖ إِن كُنتُمْ تَعْلَمُونَ﴾

अल्लाह तआलाले आदरणीय इब्राहीमको यस कथनको पुष्टि गर्‍यो तथा भन्यो

﴿ٱلَّذِينَ ءَامَنُوا۟ وَلَمْ يَلْبِسُوٓا۟ إِيمَٰنَهُم بِظُلْمٍ أُو۟لَٰٓئِكَ لَهُمُ ٱلْأَمْنُ وَهُم مُّهْتَدُونَ﴾

[3]अर्थात् वृद्धा अवस्थामा जब उनी सन्तानको जन्मसित निराश भइसकेका थिए, जस्तो कि सूरः अल-हद आयत संख्या ७२ मा छ, अनि पुत्रको साथ यस्तो पौत्रको शुभ-सूचना दियो जो याकुब हुनेछ, जसको अर्थमा यो भावार्थ निहित छ कि त्यस पश्चात उनको सन्तानको वंश चल्नेछ, यसकारण कि यो अक़ब (पछाडि) शब्दबाट उत्पन्न भएको हो ।

وَمِن ذُرِّيَّتِهِۦ دَاوُۥدَ وَسُلَيْمَٰنَ وَأَيُّوبَ وَيُوسُفَ وَمُوسَىٰ وَهَٰرُونَ ۚ وَكَذَٰلِكَ نَجْزِى ٱلْمُحْسِنِينَ ﴿٨٤﴾

तथा यसभन्दा पूर्व नुहलाई मार्ग देखायौं तथा उनको सन्तानमा[1] दाऊद एवं सुलैमान तथा अय्यूब एवं यूसुफ तथा मूसा एवं हारूनलाई, तथा यसैप्रकार हामी शुभ-सुन्दर कर्म गर्नेहरूलाई प्रत्युपकार (प्रतिफल) प्रदान गर्दछौं ।

وَزَكَرِيَّا وَيَحْيَىٰ وَعِيسَىٰ وَإِلْيَاسَ ۖ كُلٌّ مِّنَ ٱلصَّٰلِحِينَ ﴿٨٥﴾

(८५) तथा जकरिया एवं यहया तथा ईसा[2] एवं इलियासलाई (पनि मार्ग देखायौं), यिनीहरूमा प्रत्येक सदाचारी थियो ।

وَإِسْمَٰعِيلَ وَٱلْيَسَعَ وَيُونُسَ وَلُوطًا ۚ وَكُلًّا فَضَّلْنَا عَلَى ٱلْعَٰلَمِينَ ﴿٨٦﴾

(८६) तथा इस्माईल र यसअ तथा यूनुस र लूतलाई पनि, प्रत्येकलाई हामीले सम्पूर्ण संसारवासीमाथि प्रधानता प्रदान गर्‍यौं ।

---

[1](ذرية) अरबी भाषाको यस शब्दमा सर्वनामको समावेशलाई नूहतिर संकेत भएको केही विद्वानहरूले स्वीकार गरेका छन् किनभने तीनै निकटवर्ती छन् । अर्थात् आदरणीय नूहका सन्तानमध्ये दाऊद तथा सुलैमानलाई तथा केहीले आदरणीय इब्राहीमलाई किनभने सम्पूर्ण वर्णन उनैका विषयमा भैराखेको छ । तर यस परिस्थितिमा यो कठिनाई आउँछ कि त्यसो भए लूतको वर्णन यस सूचीमा हुनु हुँदैनथ्यो किनभने उनी इब्राहीमको सन्तानमा छैनन् । उनी उनको भाई हारान पुत्र आज़रका पुत्र अर्थात् इब्राहीमका भतिज थिए । तथा इब्राहीम लूतको पिता होइन, बरू काका हुन् । परन्तु सम्मान स्वरूप उनलाई इब्राहीमको सन्तानमा सम्मिलित गरिएको छ । यसको एक अन्य उदाहरण कुर्आन करीममा छ । जहाँ आदरणीय इस्माईललाई याकूबको सन्तानको पूर्वजमा सम्मिलित गरिएको छ, जबकि उनी उनका काका थिए । हेर्नुस् (सूरः अल-बक़रः-१३३)

[2]ईसा अलैहिस्सलामको वर्णन आदरणीय नूह अथवा इब्राहीमको सन्तानमा यसकारण गरिएको छ (यद्यपि उनका पिता थिएनन्) कि पुत्रीको सन्तान पनि पुरूषको सन्तानमा सम्मिलित हुन्छ । जुन प्रकारले नबी सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय हसन (रज़ी अल्लाहु अन्हु) (आफ्नी पुत्री आदरणीय फ़ातिमा रज़ी अल्लाह अन्हा) को पुत्रलाई आफ्नो पुत्र भन्नुभयो । « إِنَّ ابْنِي هَذَا سَيِّدٌ وَلَعَلَّ اللهَ أَنْ يُصْلِحَ بِهِ بَيْنَ فِئَتَيْنِ عَظِيمَتَيْنِ، مِنَ الْمُسْلِمِينَ » (सहीह बुख़ारी किताबुस सुलह बाब कौलु अन्नबी लिलहसन बिन अली इब्नी हाज़ा सैय्यद) (विस्तारपूर्वक जानकारीको लागि हेर्नुस् तफसीर इब्ने क़सीर)

(८७) तथा उनका पिता तथा सन्तान एवं भाईहरू[१] मध्ये कैयन्लाई (मार्ग देखायौं तथा हामीले उनलाई रोज्यौं र उनलाई सोझो मार्ग देखायौं ।

وَمِنْ اٰبَآىِٕهِمْ وَذُرِّيّٰتِهِمْ وَاِخْوَانِهِمْ ۚ وَاجْتَبَيْنٰهُمْ وَهَدَيْنٰهُمْ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٨٧﴾

(८८) यही अल्लाहको मार्ग हो जसबाट त्यसले आफ्ना भक्तहरू मध्येबाट जसलाई चाहन्छ, त्यसलाई मार्ग दर्शाउँछ तथा यदि उनीहरूले पनि शिर्क (मिश्रण) गरेको भए उनका कर्म व्यर्थ जाने थिए ।[२]

ذٰلِكَ هُدَى اللّٰهِ يَهْدِيْ بِهٖ مَنْ يَّشَآءُ مِنْ عِبَادِهٖ ؕ وَلَوْ اَشْرَكُوْا لَحَبِطَ عَنْهُمْ مَّا كَانُوْا يَعْمَلُوْنَ ﴿٨٨﴾

(८९) यिनीहरूलाई नै हामीले किताब (धर्मशास्त्र) तथा धर्म-विधान एवं दूतत्व प्रदान गर्‍यौं र यदि

اُولٰٓىِٕكَ الَّذِيْنَ اٰتَيْنٰهُمُ الْكِتٰبَ وَالْحُكْمَ وَالنُّبُوَّةَ ۚ فَاِنْ يَّكْفُرْ بِهَا

[१]पूर्वजसित मूल तथा सन्तानसित शाखाहरू तात्पर्य हो अर्थात् उनका मूल तथा शाखा एवं भाईहरू मध्येबाट पनि धेरैलाई हामीले उच्चपद तथा मार्गदर्शन प्रदान गर्‍यौं । (اجتباء) को अर्थ हो निर्वाचित गर्नु तथा आफ्ना विशेष भक्तहरूमा गणना गर्नु तथा उनीमा एकत्रित गर्नु । यो अर्थ (جبيت الماء في الحوض) (मैले जलाशयको जल एकत्रित गरें) बाट लिइएको छ, अतः (اختيار) सित तात्पर्य आफ्ना विशेष भक्तहरूमा सम्मिलित गर्नुपर्नेछ । (اصطفاء) (इस्तेफ़ा), (تخليص) (तख़लीस), (اختيار) (इख्तेयार) यसै अर्थमा प्रयोग गरिन्छन् जसका कारकका रूप मुस्तफ़ा, मुज्तबा, मख़लिस तथा मुख़्तार हुन् । (फ़तहुल क़दीर)

[२]अठार नबीहरूका नामहरूको वर्णन गरी अल्लाह तआला भनिराखेको छ, यदि उनीहरू पनि बहुईश्वरवादमा अल्झेको भए उनका सारा कर्म नष्ट हुने थिए । जुन प्रकारले नबी सल्लल्लाहु अलैहि वसल्लमलाई अर्को स्थानमा सम्बोधित गर्दै अल्लाह तआलाले आदेश गर्‍यो ।

﴿لَئِنْ اَشْرَكْتَ لَيَحْبَطَنَّ عَمَلُكَ﴾

"हे पैग़म्बर यदि तिमीले पनि अल्लाह तआलासँग कुनै अन्यलाई मिश्रण गर्‍यौ भने तिम्रा सारा कर्महरू नष्ट गरिदिइनेछन् ।" (सूरः अल-जुमर-६५)

यद्यपि पैग़म्बरहरूबाट शिर्क हुनु सम्भव छैन । उद्देश्य अनुयायीहरूलाई शिर्कको भयानकता तथा विनाशबाट सतर्क गर्नु हो ।

هَٰٓؤُلَآءِ فَقَدۡ وَكَّلۡنَا بِهَا قَوۡمٗا لَّيۡسُواْ بِهَا بِكَٰفِرِينَ ﴿٨٩﴾

यिनीहरूले यसलाई मान्दैनन्[1] भने हामीले यस्ता मानिसहरूलाई तयार गरिसकेका छौं जसले यसको इन्कार गर्दैनन् ।[2]

أُوْلَٰٓئِكَ ٱلَّذِينَ هَدَى ٱللَّهُۖ فَبِهُدَىٰهُمُ ٱقۡتَدِهۡۗ قُل لَّآ أَسۡـَٔلُكُمۡ عَلَيۡهِ أَجۡرًاۖ إِنۡ هُوَ إِلَّا ذِكۡرَىٰ لِلۡعَٰلَمِينَ ﴿٩٠﴾

(९०) यिनीहरू नै हुन् जसलाई अल्लाहले सत्यमार्ग देखायो, अत: तपाईं उनको मार्गको अनुसरण गर्नुस्,[3] तपाईं भन्नुस कि म यसमा कुनै प्रतिकारको माग गर्दिन ।[4] यो विश्वास गर्नेहरूका निम्ति मात्र स्मृति हो ।[5]

وَمَا قَدَرُواْ ٱللَّهَ حَقَّ قَدۡرِهِۦٓ إِذۡ قَالُواْ مَآ أَنزَلَ ٱللَّهُ عَلَىٰ بَشَرٖ مِّن شَيۡءٖۗ قُلۡ مَنۡ أَنزَلَ ٱلۡكِتَٰبَ ٱلَّذِي جَآءَ بِهِۦ

(९१) तथा उनीहरूले जुन प्रकारले अल्लाहको सम्मान गर्नुपर्दथ्यो सम्मान गरेनन्, जब उनीहरूले यो भने कि अल्लाहले कुनै मनुष्यमाथि केही अवतरित गरेन ।[6] तपाईं भन्नुस् कि मूसा जुन शास्त्र

[1]यसबाट तात्पर्य रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका विरोधी, मूर्तिपूजक तथा अधर्मी हुन् ।

[2]यसबाट तात्पर्य मक्काबाट गई मदीनामा बस्ने तथा मदीनावासी मुसलमान तथा प्रलय पर्यन्त (अन्तिम दिनसम्म) आउने निष्ठावानहरू हुन् ।

[3]यसबाट तात्पर्य उपरोक्त ईशदूत हुन् । उनको अनुसरणको आदेश एकेश्वरवाद (तौहीद) को सम्बन्धमा तथा ती आदेशहरू एवं नियममा छन् जुन निरस्त भएका छैनन् । (फ़तहुल क़दीर) किनभने सबै धर्महरूका मूल विधान एउटै रहेका छन्, यद्यपि कर्म तथा विधिमा केही भिन्नता रह्यो । जस्तो कि आयत ﴿شَرَعَ لَكُم مِّنَ ٱلدِّينِ مَا وَصَّىٰ بِهِۦ نُوحٗا﴾ (सूर: अल-शूरा-१३) बाट स्पष्ट छ ।

[4]अर्थात् सतर्क गर्ने तथा धर्मतिर आमन्त्रित गर्नको, किनभने मलाई यसको त्यो बदला नै प्राप्त छ जुन परलोकमा अल्लाह तआलाको तर्फबाट प्राप्त हुनेछ ।

[5]बुद्धि भएकाले यसबाट शिक्षा ग्रहण गरून् । यो कुरआनले उनलाई अविश्वास तथा मिश्रणको अन्धकारबाट निकालेर मार्गदर्शनको प्रकाश प्रदान गर्नेछ तथा कुपथका बाङ्गो-टिङ्गा पथहरूबाट बचाएर ईमानको सोझो मार्गमा हिड़ाल्ने छ यदि कोही यसबाट शिक्षा प्राप्त गर्न चाहन्छ, अन्यथा "अन्धोलाई अँध्यारोमा के देखिन्छ" भन्ने कुरो चरितार्थ हुनेछ ।

[6](قَدَّر) (क़द्दर) को अर्थ अनुमान लगाउनु हो तथा यो कुनै वस्तुको यथार्थ एवं ज्ञान प्राप्त गर्नुको अर्थमा प्रयोग हुन्छ । अर्थात् यी मक्काका मूर्तिपूजक रसूललाई पठाइने तथा किताबको अवतरण हुने कुरोबाट इन्कार गर्दछन् जसको स्पष्ट अर्थ यो हो कि उनलाई अल्लाहको सही ज्ञान छैन अन्यथा तथ्यलाई अस्वीकार गर्दैनथे । यसको अतिरिक्त आत्मज्ञान नहुनुको कारण दूतत्व तथा रिसालतमा पनि अनभिज्ञ रहे ।

مُوسٰى نُورًا وَهُدًى لِّلنَّاسِ تَجْعَلُونَهٗ قَرَاطِيسَ تُبْدُونَهَا وَتُخْفُونَ كَثِيرًا ۚ وَعُلِّمْتُم مَّا لَمْ تَعْلَمُوٓا أَنتُمْ

तिम्रो पासमा ल्याए जुन ज्योति तथा मार्गदर्शन हो, त्यसलाई कसले अवतरित गऱ्यो जसलाई तिमी विभिन्न पृष्ठहरूमा राख्दछौ,[1] जसमध्येबाट केही व्यक्त गर्दछौ

तथा यो ठानिराखे कि कुनै मानव पुरूषमाथि अल्लाहको किताब कसरी अवतरित हुनसक्छ ? जस्तो कि अन्य स्थानमा अल्लाह तआ़लाले आदेश गरेको छ ।

﴿ أَكَانَ لِلنَّاسِ عَجَبًا أَنْ أَوْحَيْنَآ إِلَىٰ رَجُلٍ مِّنْهُمْ أَنْ أَنذِرِ النَّاسَ ﴾

"के यो कुरा मानिसहरूको निम्ति आश्चर्यजनक छ कि हामीले तिनै मध्येबाट एउटा मानिसमाथि वह्‌यी (आदेश) अवतरण गरेर उसलाई मानिसहरूलाई तर्साउनको निम्ति नियुक्त गरिदिएका छौं ?" (सूर:-यूनुस-२)

अन्य स्थानमा अल्लाहको आदेश छ

﴿ وَمَا مَنَعَ النَّاسَ أَنْ يُؤْمِنُوٓا إِذْ جَآءَهُمُ الْهُدَىٰٓ إِلَّآ أَنْ قَالُوٓا أَبَعَثَ اللَّهُ بَشَرًا رَّسُولًا ﴾

"मार्गदर्शन आईसके पश्चात मानिसहरू त्यसलाई स्वीकार गर्नुबाट यसकारण रोकिए कि उनीहरूले भने कि के अल्लाहले एउटा मनुष्यलाई रसूल बनाएर पठाएको छ ?" (सूर: बनी-इस्राईल-९४)

यसको केही विस्तार यसभन्दा पूर्वको आयत संख्या ८ को व्याख्यामा वर्णित भइसकेको छ । व्याख्याधीन आयतमा पनि उनीहरूले आफ्नो यसै विचारको आधारमा यी कुराहरूलाई नकारेका छन् कि अल्लाह तआ़लाले कुनै मनुष्यलाई कुनै किताब अवतरित गरेको छ । अल्लाह तआ़लाले भन्नुभयो यदि यस्तो कुरो छ भने सोध कि मूसामाथि तौरात कसले अवतरित गरेको थियो ? (जसलाई यिनीहरू मान्दछन्)

[1]आयतको उपरोक्त व्याख्या अनुसार अब यहूदीहरूलाई सम्बोधित गरी भनिदैंछ कि तिमी यस किताबलाई विभिन्न पृष्ठहरूमा राख्दछौं, जसमध्येबाट जसलाई चाहन्छौ प्रकाशित गर्दछौ, जसलाई चाहन्छौं लुकाएर राख्छौ । जस्तै ढुङ्गाले हानेर दण्डित गर्नुको नियम अथवा नबी सल्लल्लाहु अलैहि वसल्लमका गुणहरूको कुरो छ । हाफिज़ इब्ने कसीर तथा इमाम इब्ने ज़रीर तबरी आदिले (يجعلونه و يبدونها) वाक्यलाई प्राथमिकता दिएका छन् तथा तर्क यो दिएका छन् कि यो मक्की आयत हो, यसमा यहूदीहरूलाई सम्बोधित कुन प्रकारले गर्न सकिन्छ ? तथा अन्य केही व्याख्याकारहरूले सम्पूर्ण आयतलाई यहूदीहरूसित सम्बन्धित मानेका छन् । यसमा प्रारम्भदेखि नै दूतत्व तथा ऋषित्वको जुन इन्कार छ, त्यसलाई यहूदीहरूको हठधर्मी, ईर्ष्या तथा द्वेषमा आधारित कथन सिद्ध गरेका छन् अर्थात् यस आयतको व्याख्यामा व्याख्याकारहरूका तीन मत छन् । एक गुट पूरा आयत यहूदीहरूसित, अरूहरू पूरा आयतलाई मक्काका मूर्तिपूजकहरुसित

وَلَآ اٰبَآؤُكُمْ ۗ قُلِ اللّٰهُ ۙ ثُمَّ ذَرْهُمْ فِيْ خَوْضِهِمْ يَلْعَبُوْنَ ﴿٩١﴾

तथा अधिकतर लुकाउँदछौ तथा तिमीलाई त्यो ज्ञान प्रदान गरियो जसलाई तिमी तथा तिम्रा पूर्वज जान्दैनथे ।[1] तपाईं भन्नुस् कि अल्लाहले,[2] अनि उनीहरूलाई उनका हालमा छाडिदिनुस् ताकि आफ्ना टीका-टिप्पणीसित खेलिरहुन् ।

وَهٰذَا كِتٰبٌ اَنْزَلْنٰهُ مُبٰرَكٌ مُّصَدِّقُ الَّذِيْ بَيْنَ يَدَيْهِ وَلِتُنْذِرَ اُمَّ الْقُرٰى وَمَنْ حَوْلَهَا ۗ وَالَّذِيْنَ يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ يُؤْمِنُوْنَ بِهٖ وَهُمْ عَلٰى صَلَاتِهِمْ يُحَافِظُوْنَ ﴿٩٢﴾

(९२) यो पनि एउटा शुभशास्त्र हो, जसलाई हामीले अवतरित गरेका छौं, आफूभन्दा पूर्वका (धर्मशास्त्रहरू) को प्रमाणकारी छ। ताकि तपाईं मूल नगरी (मक्का) तथा त्यसको आसपास (का नगरहरू अर्थात सम्पूर्ण मानव जगत) लाई सचेत गर्नुहोस्, तथा जो परलोकबारे विश्वास राख्दछन् तिनैले यसलाई मान्नेछन् तथा ती नै आफ्ना नमाज़हरूको रक्षा गर्नेछन् ।

وَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا اَوْ قَالَ اُوْحِيَ اِلَيَّ وَلَمْ يُوْحَ اِلَيْهِ شَيْءٌ وَّمَنْ قَالَ سَاُنْزِلُ مِثْلَ مَآ اَنْزَلَ اللّٰهُ ۗ وَلَوْ تَرٰٓى اِذِ الظّٰلِمُوْنَ فِيْ غَمَرٰتِ الْمَوْتِ وَالْمَلٰٓئِكَةُ بَاسِطُوْٓا اَيْدِيْهِمْ ۚ اَخْرِجُوْٓا اَنْفُسَكُمْ ۗ اَلْيَوْمَ تُجْزَوْنَ

(९३) त्यसभन्दा बढी अत्याचारी को हुनसक्दछ जो अल्लाहमाथि झूटो आरोप लगाउँछ अथवा भन्छ कि मतिर ईशवाणी आएको छ जबकि उसतिर केही पनि आएको छैन । तथा जसले भन्यो कि जुन प्रकार अल्लाहले अवतरित गर्यो म पनि अवतरण गर्नेछु यदि तपाईं अत्याचारीहरूलाई मृत्युको घोर यातनामा देख्नुहुन्छ ।[3] जब यमदूत आफ्ना

तथा तेस्रो गुट आयतको प्रारम्भिक भागलाई मूर्तिपूजकहरूसित सम्बन्धित तथा (تجعلونه) बाट यहूदीहरूसित सम्बन्धित सिद्ध गर्दछन् । (والله اعلم)

[1]यहूदीहरूको विषयमा मान्नुको स्थितिमा यसको व्याख्या हुनेछ कि तिमीलाई तौरातद्वारा भनियो तथा अन्य परिस्थितिमा कुर्आनद्वारा ।

[2]यो (من أنزل) कसले उतारेको उत्तर हो ।

[3]अत्याचारीहरूसित तात्पर्य सबैप्रकारका अत्याचारी हुन् । तथा यस अन्तर्गत अल्लाहको किताबका निवर्ती तथा दूतत्वका झूठा दावेदार सबै आउँछन् । (غمرات) सित मृत्युको संकट तात्पर्य छ । "फरिश्ताहरू (यमदूत) आफ्नो हात अघि बढाइ राखेका हुनेछन् ।" अर्थात् प्राण निकाल्नको लागि । (اليوم) (आज) सित तात्पर्य प्राण निकालिने दिन हो तथा यही यातनाको प्रारम्भ हुनुको समय पनि हो, जसको प्रारम्भ कब्र (चिहान) बाट छ । यसबाट सिद्ध हुन्छ कि कब्रमा यातना सत्य छ ।

عَذَابَ الْهُونِ بِمَا كُنتُمْ تَقُولُونَ عَلَى اللَّهِ غَيْرَ الْحَقِّ وَكُنتُمْ عَنْ آيَاتِهِ تَسْتَكْبِرُونَ ﴿٩٣﴾

हात अघि बढाइराखेका हुन्छन् कि निकाल, आफ्नो प्राण आज तिमीलाई अल्लाहमाथि अनुचित आरोप लगाउनु तथा घमण्डपूर्वक त्यसका आयतहरूलाई अस्वीकार गर्नुको कारण अपमानजनक दण्ड दिइनेछ ।[1]

وَلَقَدْ جِئْتُمُونَا فُرَادَىٰ كَمَا خَلَقْنَاكُمْ أَوَّلَ مَرَّةٍ وَتَرَكْتُم مَّا خَوَّلْنَاكُمْ وَرَاءَ ظُهُورِكُمْ وَمَا نَرَىٰ مَعَكُمْ شُفَعَاءَكُمُ الَّذِينَ زَعَمْتُمْ أَنَّهُمْ فِيكُمْ شُرَكَاءُ لَقَد تَّقَطَّعَ بَيْنَكُمْ وَضَلَّ عَنكُم مَّا كُنتُمْ تَزْعُمُونَ ﴿٩٤﴾

(९४) तथा निश्चय नै तिमी एक-एक गरी आयौ ।[2] जुन प्रकार तिमीलाई प्रथम पटक पैदा गरेका थियौं तथा तिमीलाई जे दिएका थियौं त्यसलाई आफ्नो पछाडि छाडेर आयौ तथा तिम्रा सिफारिश गर्नेहरू हामीले देखिराखेका छैनौं, जसलाई तिमीले आफ्ना कार्यहरूमा हाम्रा साभ्ग्ने ठानिराखेका थियौ। निःसन्देह तिम्रा पारस्परिक सम्बन्ध विच्छेद भइसकेको छ तथा तिम्रो विचार तिमीबाट हराइसकेको छ ।

---

अन्यथा हात फैलाउनु तथा ज्यान निकाल्नुको आदेश दिनुको साथ यस कुरालाई भन्नुको आवश्यकता थिएन कि आज तिमीलाई अपमानित हुने यातना दिइने छ। ध्यान रहोस् कब्रसित तात्पर्य बर्ज़खको जीवन हो। सांसारिक एवं परलोक मध्येको जीवन जुन मृत्युदेखि प्रलय हुने सम्मको हो । यसलाई बर्ज़खी जीवन भनिन्छ । चाहे त्यसलाई नरभक्षीले खाएको होस् अथवा यसको शव समुद्रका तरङ्गहरूमा समाविष्ट भइसकेको होस् अथवा त्यसलाई पोलेर खरानी पारिदिइएको होस् अथवा कब्र (चिहान) मा दफनाइएको होस्। यो बरज़खको जीवन हो जसमा यातना दिनुमा अल्लाह तआला सामर्थ्य राख्दछ।

[1]अल्लाहमाथि झूठो बोल्नुमा धर्मशास्त्र तथा ईशदूतहरूलाई पठाइने कुरोको इन्कार पनि आउँछ तथा दूतत्वको झूठो दाबी पनि । यसैप्रकार दूतत्व एवं ऋषित्वको इन्कार तथा झुठ्लाउनु पनि हो । यी दुबैको कारणले उनीहरूलाई अपमानजनक दण्ड दिइनेछ ।

[2](فرادى) अरबी भाषामा (فرد) को बहुवचन हो, जुन प्रकार (سكارى) बहुवचन हो (سكران) को, तथा (كسالى) बहुवचन हो (كسلان) को। यसको अर्थ यो हो कि तिमी अलग-अलग एक-एक गरी मेरो पासमा आउने तिमीसग न धन हुनेछ न सन्तान तथा न ती देवता जसलाई तिमीले अल्लाहको साझेदार तथा आफ्नो सहायक ठानेका थियौ। अर्थात् यिनीमध्येबाट कुनै पनि वस्तु तिमीलाई त्यहाँ लाभ पुऱ्याउनमा असमर्थ छ। आउने वाक्यमा यिनै विषयहरूको अत्याधिक विवरण छ ।

(९५) अल्लाह नै बिउ तथा गेडाहरूलाई च्याती टुसा अंकुरित गर्दछ ।[1] त्यसले सजीवलाई निर्जीवबाट[2] एवं निर्जीवलाई सजीवबाट निकाल्दछ,[3] त्यही अल्लाह हो, अनि तिमी विमुख भई कहाँ गइराखेका छौ ?

إِنَّ ٱللَّهَ فَالِقُ ٱلۡحَبِّ وَٱلنَّوَىٰۖ يُخۡرِجُ ٱلۡحَيَّ مِنَ ٱلۡمَيِّتِ وَمُخۡرِجُ ٱلۡمَيِّتِ مِنَ ٱلۡحَيِّۚ ذَٰلِكُمُ ٱللَّهُۖ فَأَنَّىٰ تُؤۡفَكُونَ ٩٥

(९६) त्यही नै बिहानी प्रस्फुटित गर्ने हो[4] तथा त्यसले रात्रिलाई विश्रामको लागि[5] एवं सूर्य तथा चन्द्रमालाई

فَالِقُ ٱلۡإِصۡبَاحِ وَجَعَلَ ٱلَّيۡلَ سَكَنًا وَٱلشَّمۡسَ وَٱلۡقَمَرَ حُسۡبَانًاۚ ذَٰلِكَ

[1]यहाँबाट अल्लाह तआलाको अतुलनीय शक्ति तथा सामर्थ्यको वर्णन प्रारम्भ भइराखेको छ । आदेश गऱ्यो, अल्लाह तआला बीउ तथा गेडालाई, जसलाई किसान धर्तीभित्र थिचिदिन्छ, त्यसलाई च्यातेर अनेकौं रङ्ग-रूपको वृक्ष उमार्छ । धर्ती एक हुन्छ, पानी पनि जसबाट खेतहरूको सिंचाई हुन्छ, एकै प्रकारको हुन्छ, तर जुन-जुन कुराका तिनी दाना र गेडाहरू हुन्छन् तिनै अनुरूप अल्लाह तआला तिनीबाट विभिन्न प्रकारका अन्न तथा फलहरूको वृक्ष उमार्छ । के अल्लाहको अतिरिक्त अन्य कोही छ, जो यस कार्यलाई गर्दछ अथवा गर्न सक्दछ ?

[2]अर्थात् दाना तथा गेडाबाट उमार्छ, जसमा जीवन हुन्छ तथा त्यो हुर्काउँछ, फुलाउँछ, फलाउँछ अथवा अनाज दिन्छ । अथवा वास्नाले पूर्ण रङ्गीचङ्गी फूल, जसलाई देखेर, सुँघेर मुनष्य प्रफुल्लता तथा आनन्दका आभास गर्दछ । अथवा वीर्य तथा अण्डाबाट मुनष्य तथा पंक्षीहरूलाई सृष्टि गर्छ ।

[3]अर्थात् पंक्षीहरूका फूल जुन मृतप्राय छन् । जीवित तथा मृतको तुलना ईमानवाला तथा काफिरहरूसित पनि गरिएको छ अर्थात् ईमान भएकाहरूको घरमा काफिरहरू तथा काफिरहरूको घरमा ईमानवालाको सृष्टि गर्दछ ।

[4]अन्धकार तथा प्रकाशलाई उत्पन्न गर्ने पनि त्यही हो । त्यो रातको अँध्यारोबाट बिहानीको प्रकाश उत्पन्न गर्दछ, जसबाट प्रत्येक कुरो प्रकाशमान हुनजान्छ ।

[5]अर्थात् प्रत्येक रातलाई अन्धकारमा परिवर्तित गरिदन्छ, ताकि मानिसहरू प्रकाशको सबै व्यस्ततालाई समाप्त गरी आराम गर्न सकून् ।

تَقْدِيرُ الْعَزِيزِ الْعَلِيمِ ﴿٩٦﴾

(समयको) हिसाब गर्नलाई बनायो ।[१] यो परम प्रभावी ज्ञाता (अल्लाह) को निर्धारण हो ।

وَهُوَ الَّذِي جَعَلَ لَكُمُ النُّجُومَ لِتَهْتَدُوا بِهَا فِي ظُلُمَاتِ الْبَرِّ وَالْبَحْرِ ۗ قَدْ فَصَّلْنَا الْآيَاتِ لِقَوْمٍ يَعْلَمُونَ ﴿٩٧﴾

(९७) तथा उसैले तिम्रो लागि ताराहरूको सृष्टि गऱ्यो ताकि तिमी उनीद्वारा स्थल र समुद्रका अन्धकारहरूमा बाटो पत्ता लगाउन सक,[२] हामीले उनीहरूको लागि निशानीहरूको विवरण भनिसकेका छौं जो ज्ञान राख्दछन् ।

وَهُوَ الَّذِي أَنشَأَكُم مِّن نَّفْسٍ وَاحِدَةٍ فَمُسْتَقَرٌّ وَمُسْتَوْدَعٌ ۗ قَدْ فَصَّلْنَا

(९८) तथा उसैले तिमीलाई एक प्राणबाट उत्पन्न गऱ्यो अनि तिम्रो एक स्थाई तथा एक समर्पण

[१]अर्थात् दुबैको निम्ति एउटा मापको निर्धारण छ, जसमा उनीहरू कुनै पनि प्रकारको परिवर्तन गर्न सक्दैन । दुबैका आ-आफ्ना पथ छन् जसमा उनी जाडो, गर्मी सबै परिस्थितिहरूमा अग्रसर छन्, जसको आधारमा जाडोमा दिन छोटो तथा रात्री ठूलो तथा गर्मीमा यसको विपरीत दिन लामो तथा रात्रि छोटो हुनजान्छ, जसको विस्तृत वर्णन सूरः यूनुस-५, सूरः यासीन-४० तथा सूरः आराफ-५४ मा पनि छ । यसको यो अर्थ पनि लिइएको छ कि सूर्य एवं चन्द्रमाबाट दिन-रात तथा महिना र वर्षको हिसाब लगाउन सकिन्छ । उपरोक्त अनुवाद यसै अर्थलाई लिएर गरिएको छ ।

[२]यस ठाउँमा ताराहरूको लाभ तथा लक्ष्य भनिएको छ तथा यसका अन्य अरू पनि दुईटा लक्ष्य छन् जुन अन्य स्थानमा वर्णन गरिएका छन् । आकाशहरूको शोभा तथा शैतानहरूको दण्ड । अर्थात् यदि शैतान आकाशमा जाने प्रयत्न गर्दछन् भने यी उनीमाथि उल्का (ज्वाला) बनेर खस्दछन् । केही सलफको कथन छ । "यी तीन कुराहरूका अतिरिक्त यी ताराहरूको विषयमा यदि कुनै व्यक्ति विश्वास राख्दछ भने त्यो त्रुटिमा छ तथा अल्लाहमाथि मित्थ्या आरोप लगाउँछ ।"

यसबाट ज्ञात हुन्छ कि हाम्रो देशमा जुन ज्योतिष विज्ञानको चर्चा छ, जसमा ताराहरूद्वारा भविष्यका घटनाहरू तथा मनुष्यका जीवन अथवा जगतमा तिनको प्रभावको दावी गरिंदैछ, त्यो निराधार छ तथा धार्मिक नियमहरूको विरूद्ध पनि । अतः एउटा हदीसमा यसलाई जादूकै एउटा हाँगा भनिएको छ ।

« مَنِ اقْتَبَسَ عِلْمًا مِّنَ النُّجُومِ اقْتَبَسَ شُعْبَةً مِّنَ السِّحْرِ زَادَ مَا زَادَ »

"जो व्यक्ति ज्योतिष विज्ञान प्राप्त गर्दछ । त्यो एक प्रकारको जादू सिक्दछ ।" (हस्सनहू अलबानी सहीह अबू दाऊद संख्या ३९०५)

ٱلْـَٔايَـٰتِ لِقَوْمٍ يَفْقَهُونَ ﴿٩٨﴾

स्थान छ ।[१] हामीले उनीहरूका लागि निशानीहरू (लक्षणहरू) को वर्णन गरिदिएका छौं जो जान्न चाहन्छन् ।

وَهُوَ ٱلَّذِىٓ أَنزَلَ مِنَ ٱلسَّمَآءِ مَآءً فَأَخْرَجْنَا بِهِۦ نَبَاتَ كُلِّ شَىْءٍ فَأَخْرَجْنَا مِنْهُ خَضِرًا نُّخْرِجُ مِنْهُ حَبًّا مُّتَرَاكِبًا وَمِنَ ٱلنَّخْلِ مِن طَلْعِهَا قِنْوَانٌ دَانِيَةٌ وَجَنَّـٰتٍ مِّنْ أَعْنَابٍ وَٱلزَّيْتُونَ وَٱلرُّمَّانَ مُشْتَبِهًا وَغَيْرَ مُتَشَـٰبِهٍ ۗ ٱنظُرُوٓا۟ إِلَىٰ ثَمَرِهِۦٓ

(९९) तथा त्यही हो जसले आकाशबाट वर्षा गर्‍यो, अनि हामीले त्यसद्वारा हरेक प्रकार वनस्पति उब्जायौं[२] पछि त्यसबाट हरिया पातहरू निकाल्यौं[३] जसबाट हामी तलमाथि टाँसिएका अन्न[४] तथा खजूरका गाभबाट झुण्डिराखेका झुप्पा[५] पनि एवं अंगूरहरू तथा जैतून र अनारका बगैंचा[६] (उद्यान) विकसित गर्‍यौ जुन एक अर्कासित मिल्दो जुल्दो हुन्छन् एवं एक अर्कासित भिन्न पनि हुन्छन् ।[७] तिनका फलहरूलाई हेर जब फल्दछन्

---

[१]अधिकतर व्याख्याकारहरूको विचारले (مُستقر) (मुस्तक़र) बाट गर्भाशय तथा (مُستودع) बाट पिताको पिठ्यूँ तात्पर्य हो । (फ़तहुल क़दीर तथा इब्ने क़सीर)

[२]यहाँबाट त्यसको आश्चर्यजनक कारीगरीको वर्णन भईराखेको छ अर्थात् वर्षाको पानी, जसबाट त्यो हरप्रकारको वनस्पति उब्जाउन्छ ।

[३]यसबाट तात्पर्य हरिया शाखाहरू तथा अंगूर हुन् जुन धर्तीमा दबिएका दानाहरूबाट अल्लाह तआ़ला धर्तीको सतहमा उमार्छ, पछि त्यो वृक्षको आकार तथा प्रकार ग्रहण गर्दछ ।

[४]ती हरिया शाखाहरूबाट माथि सतहमा पुगेका दाना तथा बालाहरू निस्कन्छन् । जस्तै जौ, जवार, बाज़रा, मकै, गहुँ तथा चामल आदि ।

[५](قِنوٌ) को वहुवचन (قنوانٌ) हो । तात्पर्य थुङ्गा अथवा समूह हुन् । (طلع) खजूरको प्रारम्भिक रूप हो, यही बढेर झुप्पो अथवा समूह बन्दछ तथा पछि त्यो परिपक्क भएर खजूर तयार हुन्छ । (دانية) सित तात्पर्य ती गुच्छा तथा समूह हुन्, जुन नजिक-नजिक हुन्छन् । तथा केही गुच्छाहरू टाढा पनि हुन्छन् जससम्म हात पुग्दैन । अनुग्रहको रूपमा निकटताको वर्णन गरिएको छ कि कृतज्ञता व्यक्त गर यसको लागि तथा जसको अर्थ छ (منها دانية ومنها بعيدةٌ) "तिनीहरूमध्ये केही निकट केही टाढा छन् ।" (بعيدة) लोप छ । (फ़तहुल क़दीर)

[६]बगैंचा, जैतून तथा अनार यी सबैको सम्बन्ध वनस्पतिसित छ अर्थात् (فأخرجنا به جنّات) अर्थात् वर्षाको जलबाट हामीले अंगुरका बगैंचा तथा जैतून एवं अनार पैदा गर्‍यौं ।

[७]अर्थात् केही गुणहरूमा एक-अर्कासित मिल्दो-जुल्दो हुन्छन् तथा केहीमा मिल्दैनन् । अथवा तिनका पातहरू एक-अर्कासित मिल्दो-जुल्दो हुन्छन्, फल मिल्दैनन् अथवा रङ्ग-रूपमा मिल्दो-जुल्दो छन् तर स्वादमा मिल्दैनन् ।

إِذَآ أَثۡمَرَ وَيَنۡعِهِۦٓۚ إِنَّ فِي ذَٰلِكُمۡ لَأٓيَٰتٖ لِّقَوۡمٖ يُؤۡمِنُونَ ﴿٩٩﴾

तथा उनको पाक्ने कुरो पनि निःसन्देह यसमा ती मानिसहरूलाई चिन्ह (निशानीहरू) छन्[1] जो विश्वास राख्दछन्।

وَجَعَلُواْ لِلَّهِ شُرَكَآءَ ٱلۡجِنَّ وَخَلَقَهُمۡۖ وَخَرَقُواْ لَهُۥ بَنِينَ وَبَنَٰتِۭ بِغَيۡرِ عِلۡمٖۚ سُبۡحَٰنَهُۥ وَتَعَٰلَىٰ عَمَّا يَصِفُونَ ﴿١٠٠﴾

(१००) तथा मानिसहरूले जिन्नहरूलाई अल्लाहका साभ्nी बनाइदिएका छन्, जबकि उसैले उनीहरूलाई सृष्टि गरेको छ, तथा त्यस (अल्लाह) को लागि पुत्र तथा पुत्रीहरू मनगढन्तहरूले रचिसकेका छन् कुनै ज्ञान नभईकन, त्यो (अल्लाह) यिनका वर्णित गुणहरूबाट पवित्र एवं (श्रेष्ठ) छ।

بَدِيعُ ٱلسَّمَٰوَٰتِ وَٱلۡأَرۡضِۖ أَنَّىٰ يَكُونُ لَهُۥ وَلَدٞ وَلَمۡ تَكُن لَّهُۥ صَٰحِبَةٞۖ وَخَلَقَ كُلَّ شَيۡءٖۖ وَهُوَ بِكُلِّ شَيۡءٍ عَلِيمٞ ﴿١٠١﴾

(१०१) त्यो आकाशहरू तथा धर्तीको अनुपम उत्पत्तिकर्ता हो, त्यसका सन्तान कहाँ हुन सक्छन्, जबकि उसको पत्नी छैन ? त्यो प्रत्येक वस्तुको रचयिता[2] सर्वज्ञ हो।

ذَٰلِكُمُ ٱللَّهُ رَبُّكُمۡۖ لَآ إِلَٰهَ إِلَّا هُوَۖ خَٰلِقُ كُلِّ شَيۡءٖ فَٱعۡبُدُوهُۚ وَهُوَ عَلَىٰ كُلِّ شَيۡءٖ وَكِيلٞ ﴿١٠٢﴾

(१०२) त्यही अल्लाह तिम्रो पोषक हो, त्यसबाहेक कोही पूज्य छैन, प्रत्येक वस्तुको रचयिता हो, अतः त्यसैलाई पूजा गर, तथा त्यो प्रत्येक वस्तुको व्यवस्थापक हो।

[1]वर्णन गरिएका सबै कुराहरूमा अखिल जगतको स्रष्टाको असीम शक्ति तथा त्यसको बुद्धिमत्ता एवं कृपाका प्रमाण हुन्।

[2]अर्थात् जस्तो अल्लाह सबै उपरोक्त वस्तुहरू उत्पन्न गर्नुमा एक्लो छ, कोही उसको साक्षी छैन त्यसैप्रकार त्यो यस योग्य छ कि उसको एक्लो बन्दना गरियोस् र कुनै अन्यलाई उसको बन्दनामा मिश्रित नगरियोस्। परन्तु मानिसहरूले एक एक्लोलाई त्यागेर देवहरूलाई त्यसको साभ्nी (अंशियार) बनाइसकेका छन् जबकि ती स्वयं अल्लाहका रचना हुन्। मिश्रणवादी बन्दना त मूर्ति अथवा समाधिहरूमा गाडिएका शवको गर्दछन्। किन्तु भनिएको छ कि उनीहरूले देवहरूलाई साक्षी बनाएका छन्। वास्तवमा देवहरूबाट तात्पर्य राक्षस हुन् तथा उनीहरूकै भनाईमा मिश्रण गरिन्छ अतः मानौ कि उनैको बन्दना गरिन्छ। यस विषयलाई पवित्र कुर्आनमा अनेक स्थानहरूमा वर्णित गरिएको छ। (उदाहरणार्थ सूरः निसा-११७, सूरः मरियम-४४ सूरः यासिन-६०, सूरः सबा-४१)

(१०३) आँखाहरूले त्यसलाई देख्न सक्दैनन्[1] र त्यो सबै दृष्टिहरूलाई देख्दछ तथा त्यो सूक्ष्मदर्शी, सर्वसूचित छ ।

لَا تُدْرِكُهُ الْأَبْصَارُ وَهُوَ يُدْرِكُ الْأَبْصَارَ وَهُوَ اللَّطِيفُ الْخَبِيرُ ﴿١٠٣﴾

(१०४) तिम्रा पालनकर्ताको तर्फबाट तिम्रो पासमा तर्क आइसकेका छन्, तसर्थ जे देख्दछौ त्यो आफ्नो भलोको निम्ति (देख्नेछौ) तथा जो अन्धो बन्नेछ, त्यसले आफ्नो अहित गर्नेछ[2] तथा म तिम्रो

قَدْ جَاءَكُمْ بَصَائِرُ مِنْ رَبِّكُمْ فَمَنْ أَبْصَرَ فَلِنَفْسِهِ وَمَنْ عَمِيَ فَعَلَيْهَا وَمَا أَنَا عَلَيْكُمْ بِحَفِيظٍ ﴿١٠٤﴾

[1](بصر) को बहुवचन (أبصار) (दृष्टिहरू) हो अर्थात् मानव दृष्टि अल्लाहको यथार्थताको अवलोकन गर्न सक्दैन । यदि यसबाट तात्पर्य नेत्र-दृष्टि छ भने यसको सम्बन्ध संसारसित हुनेछ अर्थात् भौतिक दृष्टिले कोही अल्लाहलाई देख्न सक्दैन । परन्तु सहीह तथा निरन्तर हदीसको कथनबाट ज्ञान हुन्छ कि परलोकमा निष्ठावानहरू अल्लाह तआलालाई देख्नेछन् तथा स्वर्गमा पनि त्यसको दर्शनबाट सम्मानित हुनेछन् । यसकारण मुतज़िलाको यस आयतबाट यो भाव लिनु कि अल्लाह तआलालाई कसैले पनि देख्न सक्दैन, दुनियाँमा न आखिरतमा उचित छैन, किनभने यस नकारको सम्बन्ध मात्र संसारसित छ । यसैले आदरणीय आयशा (रज़ी अल्लाहु अन्हा) पनि यस आयतबाट यो भाव निकालेर भन्ने गर्नुहुन्थ्यो, जुन व्यक्तिले पनि यो दाबी गऱ्यो कि नबी सल्लल्लाहु अलैहि वसल्लमले (मिराजको रात्रि) अल्लाह तआलाको दर्शन गर्नुभयो, त्यसले झूठो बोलेको छ। (सहीह बुखारी तफ़सीर सूरः अल-अनाम) किनभने यस आयतको आधारमा पैग़म्बरसहित कोही पनि अल्लाहलाई देख्ने सामर्थ्य राख्दैन । परन्तु पारलौकिक जीवनमा यो दर्शन सम्भव हुनेछ। जस्तो कि अन्य स्थानमा कुर्आनले यसको पक्षमा भनेको छ ।

﴿وُجُوهٌ يَوْمَئِذٍ نَاضِرَةٌ ☆ إِلَىٰ رَبِّهَا نَاظِرَةٌ﴾

"कैयन् मुख त्यसदिन तरूण हुनेछन्, आफ्नो प्रभुतिर हेरिराखेका हुनेछन् ।" (सूरः अल-क़ियामः-२२, २३)

[2](بصيرة) को बहुवचन (بصائر) हो । जुन वास्तवमा हृदयको प्रकाशको नाम हो । यहाँ तात्पर्य ती तर्क तथा युक्तिहरू हुन्, जंसलाई कुर्आनले अनेकौं स्थानमा दोहोऱ्याएको छ तथा जसलाई नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि हदीसहरूमा वर्णन गर्नुभएको छ । जो यी तर्कहरूलाई देखेर मार्गदर्शन ग्रहण गर्छन्, त्यसमा उनीहरूकै लाभ छ, अपनाउँदैन भने उसैको हानि छ जस्तो आदेश छः

﴿مَنِ اهْتَدَىٰ فَإِنَّمَا يَهْتَدِي لِنَفْسِهِ ۖ وَمَنْ ضَلَّ فَإِنَّمَا يَضِلُّ عَلَيْهَا﴾

रक्षक होइन ।[1]

وَكَذَٰلِكَ نُصَرِّفُ الْآيَاتِ وَلِيَقُولُوا دَرَسْتَ وَلِنُبَيِّنَهُ لِقَوْمٍ يَعْلَمُونَ ﴿١٠٥﴾

(१०५) यसैप्रकार हामी आयतहरूलाई विभिन्न प्रकारले वर्णन गरिराखेका छौं । ताकि उनीहरू सुनुन् र यसकारण कि उनीहरू भनुन् कि तपाईले पढ्नु भएको छ[2] र यसकारण पनि कि उनीहरूको लागि जो जान्दछन् हामी त्यसलाई राम्ररी स्पष्ट गरिदेऔं ।

اتَّبِعْ مَا أُوحِيَ إِلَيْكَ مِن رَّبِّكَ ۖ لَا إِلَٰهَ إِلَّا هُوَ ۖ وَأَعْرِضْ عَنِ الْمُشْرِكِينَ ﴿١٠٦﴾

(१०६) तपाईं आफ्ना पालनकर्ताको आदेश (प्रकाशना) को अनुसरण गर्नुस् कि अल्लाह बाहेक कोही पूज्य छैन तथा मिश्रणवादीहरूबाट विमुख हुनुस् ।

---

[1]बरू मात्र सन्देशवाहक, निवेदक तथा शुभ-सूचक हुँ । मार्ग देखाउनु मेरो काम हो तर मार्गमा हिंडाइदिने काम अल्लाहको वशमा छ ।

[2]अर्थात् हामी तौहीद (एकेश्वरवाद) का युक्तिहरूलाई यसप्रकार स्पष्ट गरी तथा विभिन्न रूपले वर्णन गर्दछौं कि मूर्तिपूजक यो भन्न थाल्छन् कि यो मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम कहींबाट पढेर तथा सिकेर आउनु भएको छ । जुन प्रकारले अन्य स्थानमा आदेश भएको छ ।

﴿ وَقَالَ الَّذِينَ كَفَرُوا إِنْ هَٰذَا إِلَّا إِفْكٌ افْتَرَاهُ وَأَعَانَهُ عَلَيْهِ قَوْمٌ آخَرُونَ ۖ فَقَدْ جَاءُوا ظُلْمًا وَزُورًا ۞ وَقَالُوا أَسَاطِيرُ الْأَوَّلِينَ اكْتَتَبَهَا ﴾

"क़ाफिरहरूले भने यो कुर्आन त उसको आफैले गढेको कुरो हो, जसमा अरूहरूले पनि यसको सहायता गरेका छन् । यी मानिसहरू यस्तो दावी गरेर अत्याचार तथा झूठो सतहमा झरेका छन् । यसको अतिरिक्त उनीहरूले भने कि यो पूर्वका मानिसहरूका कथाहरू हुन् जसलाई उसले लेखेको छ ।" (सूरः अल-फुरक़ान -४, ५)

यद्यपि कुरो यो होइन, जुन प्रकार यिनीहरू बुझ्दछन् अथवा दाबी गर्दछन्, बरू उद्देश्य यस विस्तारले बुद्धिमानहरूको लागि स्पष्ट व्याख्या गर्नु हो ताकि उनीहरूलाई सत्य कुरो पूर्णरूपले स्पष्ट हुनसकोस् ।

وَلَوْ شَآءَ ٱللَّهُ مَآ أَشْرَكُوا۟ ۗ وَمَا جَعَلْنَٰكَ عَلَيْهِمْ حَفِيظًا ۖ وَمَآ أَنتَ عَلَيْهِم بِوَكِيلٍ ﴿١٠٧﴾

(१०७) तथा यदि अल्लाहले चाहेको भए यिनी शिर्क (अल्लाहको साझेदार) ठहराउन्नथे।[1] तथा हामीले तपाईंलाई यिनीहरूको संरक्षक बनाएका छैनौं, तथा न तपाईं उनीहरूको कुनै जिम्मेवार हुनुहुन्छ।[2]

وَلَا تَسُبُّوا۟ ٱلَّذِينَ يَدْعُونَ مِن دُونِ ٱللَّهِ فَيَسُبُّوا۟ ٱللَّهَ عَدْوًۢا بِغَيْرِ عِلْمٍ ۗ كَذَٰلِكَ زَيَّنَّا لِكُلِّ أُمَّةٍ عَمَلَهُمْ ثُمَّ إِلَىٰ رَبِّهِم مَّرْجِعُهُمْ فَيُنَبِّئُهُم بِمَا كَانُوا۟ يَعْمَلُونَ ﴿١٠٨﴾

(१०८) तथा जो अल्लाहलाई छाडि अन्यलाई पुकार्दछन्, उनको निन्दा नगर अन्यथा सीमा नाघेर, अज्ञानताको कारण उनीहरू अल्लाहको निन्दा गर्नछन्,[3] यसैप्रकार हामीले प्रत्येक समुदायको लागि उनको कर्मलाई सुशोभित बनाइदिएका छौं, पछि उनीहरूलाई आफ्नो पालनकर्तातिर नै फर्कनु पर्नेछ। अत: त्यसले उनीहरूलाई त्यसबाट सूचित गर्नेछ जो उनी गर्दैरहेका छन्।

[1]यस बिन्दुको स्पष्टीकरण पहिले गरिसकिएको छ कि अल्लाहको इच्छा अन्य कुरो हो तथा त्यसको प्रसन्नता त यसैमा छ कि उसँग अरू कसैलाई सम्मिलित नगरियोस्। तैपनि मुनष्यलाई यसमा वाध्य गरेको छैन, किनभने बाध्यताबाट मनुष्यको परीक्षा हुन पाउँदैन, अन्यथा अल्लाहसित त यस्तो शक्ति छ कि त्यसले चाहेको खण्डमा कुनै व्यक्ति शिर्क गर्नको सामर्थ्य नै राख्न नसकोस्। (पुन: हेर्नुस् सूर: अल-बक़र:-२५३ तथा सूर: अल-अनाम-३५ को व्याख्या)

[2]यो विषय पनि कुरआन मजीदमा विभिन्न स्थानमा वर्णन गरिएको छ। उद्देश्य नबी सल्लल्लाहु अलैहि वसल्लमको धार्मिक नियन्त्रण तथा सतर्क गर्ने पदवीको स्पष्टीकरण हो जुनकि रिसालतको माँग हो तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लम यसै सीमासम्म प्रभारी हुनुहुन्थ्यो। यसभन्दा अधिक उहाँसँग यदि अधिकार भएको भए उहाँ सल्लल्लाहु अलैहि वसल्लमले आफ्नो प्रिय काका अबू तालिबलाई अवश्य मुसलमान बनाउनु हुन्थ्यो, जसको इस्लाम धर्मलाई स्वीकार गर्नुको सम्बन्धमा उहाँ तीब्र इच्छा राख्नुहुन्थ्यो।

[3]यो निषेधको विधिको यस नियममा आधारित छ कि यदि कुनै उचित कार्यबाट ठूलो बिगाड उत्पन्न हुन्छ भने त्यहाँनिर उचितलाई नगर्नु ठीक तथा श्रेष्ठ छ। यसप्रकार नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि भन्नुभयो कि तिमी कसैको माता-पितालाई अपशब्द नभन किनभने यसप्रकार तिमी स्वयं आफ्नो माता-पिताको सम्बन्धमा अपशब्दको कारण बन्नेछौ। (सहीह मुस्लिम किताबुल ईमान बाब बयानुल क़बाएर व अकबरेहा) इमाम शौक़ानीले लेख्नुभएको छ कि निषेध विधिको यो मूलाधार हो। (फ़तहुल क़दीर)

(१०९) तथा उनीहरूले बलपूर्वक अल्लाहको कसम खाए[1] कि उनी छेउ कुनै निशानी आयो[2] भने अवश्य मान्नेछन्, तपाईं भन्नुस कि आयतहरू अल्लाहसँग छन् ।[3] तथा तपाईंलाई के थाहा कि उनी (निशानीहरू) आए पनि मान्ने छैनन् ।

وَأَقْسَمُوا بِاللَّهِ جَهْدَ أَيْمَانِهِمْ لَئِن جَاءَتْهُمْ آيَةٌ لَّيُؤْمِنُنَّ بِهَا ۚ قُلْ إِنَّمَا الْآيَاتُ عِندَ اللَّهِ ۖ وَمَا يُشْعِرُكُمْ أَنَّهَا إِذَا جَاءَتْ لَا يُؤْمِنُونَ ﴿١٠٩﴾

(११०) तथा हामीले उनका हृदय एवं आँखाहरूलाई अन्योलमा फर्काइदिनेछौं जसरी उनीहरूले प्रथम यसप्रति विश्वास गरेनन्,[4] तथा उनलाई उनको दुष्टता (को अन्धकार) मा चकित छाडिदिनेछौं ।

وَنُقَلِّبُ أَفْئِدَتَهُمْ وَأَبْصَارَهُمْ كَمَا لَمْ يُؤْمِنُوا بِهِ أَوَّلَ مَرَّةٍ وَنَذَرُهُمْ فِي طُغْيَانِهِمْ يَعْمَهُونَ ﴿١١٠﴾

---

[1] جهد أيمانهم أى حلفوا أيمانا مؤ كدة ठूलो जोड दिएर कसम खाए ।

[2] अर्थात् कुनै ठूलो चमत्कार, जुन उनको इच्छा अनुसार होस्, जस्तै मूसाको छडी (लट्ठी), मृतकको जीवन तथा समूदको उँटनीजस्तो ।

[3] अर्थात् उनीहरूको चमत्कार सम्बन्धी माँगहरू मात्र शत्रुता एवं ईर्ष्याका कारण हुन्, मार्गदर्शन प्राप्त गर्नुको इच्छाले होइन । तैपनि यी लक्षणहरूलाई प्रकाशित गरिदिनु अल्लाह तआलाको वशमा छ, त्यो चाहन्छ भने उनको माँग पूरा गर्न सक्दछ । केही कथनहरूबाट ज्ञान हुन्छ कि मक्काका मूर्तिपूजकहरूले माँग गरेका थिए कि सफा पर्वत (जो मक्कामा हरमको नज़ीकमा छ) स्वर्णको बनाइयोस्, तब उनीहरूले विश्वास गर्ने छन् । जसबारे जिब्राइलले आएर भने कि यदि त्यसको पश्चात पनि उनले विश्वास गरेनन् भने उनको विनाश गरिदइने छ, जसलाई नबी सल्लल्लाहु अलैहि वसल्लमले रूचाउनु भएन । (इब्ने क़सीर)

[4] यसको अर्थ यो हो कि जब प्रथम पटक ईमान स्थापित गरेनन् त त्यसको प्रभाव यो भयो कि त्यसपछि पनि ईमान स्थापनाको सम्भावना समाप्त भयो । हृदय र नेत्रहरूलाई फर्काइदिनुको भावार्थ यही हो (इब्ने क़सीर)

وَلَوْ أَنَّنَا نَزَّلْنَآ إِلَيْهِمُ الْمَلَٰٓئِكَةَ وَكَلَّمَهُمُ الْمَوْتَىٰ وَحَشَرْنَا عَلَيْهِمْ كُلَّ شَىْءٍ قُبُلًا مَّا كَانُوا۟ لِيُؤْمِنُوٓا۟ إِلَّآ أَن يَشَآءَ اللَّهُ وَلَٰكِنَّ أَكْثَرَهُمْ يَجْهَلُونَ ﴿١١١﴾

(१११) तथा यदि हामीले उनको पासमा फरिश्ताहरू अवतरित गरिदिन्छौं[1] तथा यिनीसित मृतले कुरा[2] पनि गर्दछन् एवं तिनका सम्मुख प्रत्येक वस्तु एकत्रित गरिदिन्छौं[3] तैपनि अल्लाहले नै न चाहे यिनीहरू विश्वास गर्ने छैनन्, परन्तु यिनीमध्ये अधिकतरले मूर्खता गरिराखेका छन् ।[4]

وَكَذَٰلِكَ جَعَلْنَا لِكُلِّ نَبِىٍّ عَدُوًّا شَيَٰطِينَ الْإِنسِ وَالْجِنِّ يُوحِى

(११२) तथा यसैप्रकार हामीले प्रत्येक नबी (उपदेशक) को लागि जिन्न तथा मानिसहरूका शैतानहरू (राक्षस) लाई शत्रु बनायौं ।[5] जो परस्पर

[1]जस्तो कि हाम्रा सन्देशवाहकबाट उनी निरन्तर यसैको माँग गर्दछन् ।

[2]र उनी अन्तिम ईशदूत मुहम्मद صلى الله عليه وسلم को दूतत्व (रिसालत) लाई मान्थे ।

[3]यसको दोस्रो भावार्थ यो लिइएको छ कि जुन चिन्ह तिनीहरू माँगदछन् त्यो उनको समक्ष पेश गरिदिनु हुन्छ, तथा एउटा भावार्थ यो लिइएको छ कि प्रत्येक वस्तु एकत्रित भई सामूहिक रूपले यस कुराको साक्ष्य देओस् कि सन्देशवाहकहरूको यो श्रृङ्खला सत्य छ त यी सबै लक्षण तथा माँगहरूको पूर्ति गरिदिए पश्चात पनि विश्वास गर्ने छैनन्, परन्तु जसलाई अल्लाहले चाहोस् । यसै अर्थमा यो आयत (मन्त्र) पनि हो ।

﴿إِنَّ الَّذِينَ حَقَّتْ عَلَيْهِمْ كَلِمَتُ رَبِّكَ لَا يُؤْمِنُونَ ۝ وَلَوْ جَآءَتْهُمْ كُلُّ ءَايَةٍ حَتَّىٰ يَرَوُا۟ الْعَذَابَ الْأَلِيمَ﴾

"जसमा तिम्रो पालनकर्ताको वचन सिद्ध भयो । उनी दुखद दण्डको दर्शन नगरीकन विश्वास गर्ने छैनन्, यद्यपि उनको पासमा हरेक प्रकारको संकेत आइपुग्छ ।"(सूरः यूनुस-९६, ९७)

[4]तथा यी मूर्खताका कुरा नै उनको एवं सत्यप्रति विश्वासको बीचमा आवरण बनेका छन् । यदि अज्ञानको पर्दा हट्छ भने संभवतः सत्यको प्रबोध गरून् तथा त्यसपछि अल्लाहको इच्छाले सत्यलाई स्वीकार गरून् ।

[5]यो त्यही कुरा हो जुन विभिन्न प्रकारले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको सान्त्वनाको लागि गरिएको छ कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम भन्दा पूर्व जति पनि नबी आए उनलाई पनि झूठा भनियो, तथा यातनाहरू दिइए इत्यादि । उद्देश्य यो हो कि जुन प्रकारले उनीहरूले धैर्य तथा साहसले कार्य गरे, उहाँ सल्लल्लाहु अलैहि वसल्लमले पनि यी सत्यका शत्रुहरूको समक्ष धैर्य तथा दृढताको प्रर्दशन गरून् । यसबाट ज्ञात भयो कि शैतानका अनुयायी मनुष्यहरूका अतिरिक्त जिन्नहरूमा पनि छन् । तथा यी त्यस्ता हुन् जो दुबै गुटका दुष्ट, विद्रोही, अत्याचारी, दुराचारी एवं अभिमानी छन् ।

بَعۡضُهُمۡ إِلَىٰ بَعۡضٖ زُخۡرُفَ ٱلۡقَوۡلِ غُرُورٗاۚ وَلَوۡ شَآءَ رَبُّكَ مَا فَعَلُوهُۖ فَذَرۡهُمۡ وَمَا يَفۡتَرُونَ ﴿١١٢﴾

धोका दिनका लागि मिठा-मिठा कुराको प्रेरणा दिँदैरहे[1] तथा यदि तिम्रो पोषकले चाहेको भए यस्तो गर्दैनथे ।[2] अतः तपाईं उनीहरूलाई तथा उनका षड्यन्त्रलाई त्यागदिनुस् (उनको चिन्ता नगर्नुस्) ।

وَلِتَصۡغَىٰٓ إِلَيۡهِ أَفۡـِٔدَةُ ٱلَّذِينَ لَا يُؤۡمِنُونَ بِٱلۡأٓخِرَةِ وَلِيَرۡضَوۡهُ وَلِيَقۡتَرِفُواْ مَا هُم مُّقۡتَرِفُونَ ﴿١١٣﴾

(११३) ताकि उनका हृदय तिनीहरूतिर प्रवृत्त होऊन् जो परलोकप्रति विश्वास गर्दैनन् तथा त्यसबाट प्रसन्न होऊन् र त्यही पाप गरून् जुन उनीहरूले गरिराखेका थिए ।[3]

أَفَغَيۡرَ ٱللَّهِ أَبۡتَغِي حَكَمٗا وَهُوَ ٱلَّذِيٓ أَنزَلَ إِلَيۡكُمُ ٱلۡكِتَٰبَ مُفَصَّلٗاۚ وَٱلَّذِينَ ءَاتَيۡنَٰهُمُ ٱلۡكِتَٰبَ يَعۡلَمُونَ أَنَّهُۥ مُنَزَّلٞ مِّن رَّبِّكَ بِٱلۡحَقِّۖ فَلَا تَكُونَنَّ مِنَ ٱلۡمُمۡتَرِينَ ﴿١١٤﴾

(११४) त के म अल्लाहबाहेक कुनै अन्य शासकको खोजी गरुँ जबकि उसैले तिमीतिर एउटा सविस्तार शास्त्र (क़ुरआन) अवतरित गरेको छ । तथा हामीले जसलाई धर्मशास्त्र दिएका छौं उनीहरू जान्दछन् कि वास्तवमा त्यो तिम्रो पालनकर्तातिरबाट सत्य अवतरित छ । अतः तपाईं सन्देहमा नपर्नुस् ।[4]

[1]अर्थात् मनुष्य तथा जिन्नहरूलाई विचलित गर्न एक-अर्कालाई चालबाजी तथा छलको शिक्षा दिन्छन् । ताकि उनी मानिसहरूलाई धोका तथा प्रलोभनमा पार्न सकुन् । यो कुरो सामान्यरूपले दृष्टिमा आएको छ कि मानिसहरू शैतानी कार्यहरूमा एक-अर्कालाई बढीभन्दा बढी साथ दिन्छन्, जसको कारण नराम्रो कुराको छिट्टै प्रचार-प्रसार हुन जान्छ ।

[2]अर्थात् अल्लाह तआला यी शैतानी चालहरूलाई विफल बनाउन सामर्थ्य राख्दछ, परन्तु त्यो दबावमा परी यो कार्य गर्दैन किनभने यस्तो गर्नु उसको व्यवस्था तथा नियमको विरूद्ध छ, जुन उसले आफ्नो इच्छा अनुसार अपनाएको छ, जसको रहस्य त्यो मात्र राम्ररी जान्दछ ।

[3]अर्थात् शैतानको दुष्ट विचारको शिकार ती व्यक्तिहरू नै हुन्छन्, तथा तिनले नै त्यसलाई प्रिय ठान्दछन् तथा त्यस अनुसार कर्म गर्दछन् जो परलोकप्रति विश्वास (आस्था) राख्दैनन्, तथा यो सत्य हो कि जुन प्रकारले मानिसहरूको हृदयमा आख़िरतको विश्वास क्षीण हुँदै गराइराखेको छ, त्यसै अनुरूप मानिसहरू शैतानी जालमा फँसिराखेका छन् ।

[4]उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई सम्बोधित गरी वास्तवमा मुसलमानहरूलाई शिक्षा दिइराखिएको छ ।

وَتَمَّتْ كَلِمَتُ رَبِّكَ صِدْقًا وَّعَدْلًا ۚ لَا مُبَدِّلَ لِكَلِمٰتِهٖ ۚ وَهُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿١١٥﴾

(११५) तथा तिम्रो पोषकका कथन सत्य एवं न्यायमा पूर्ण[1] भए, त्यसका कथनहरूलाई कसैले परिवर्तित गर्न सक्दैन तथा त्यो राम्रो सर्वश्रोता, सर्वज्ञाता छ ।

وَاِنْ تُطِعْ اَكْثَرَ مَنْ فِى الْاَرْضِ يُضِلُّوْكَ عَنْ سَبِيْلِ اللّٰهِ ۚ اِنْ يَّتَّبِعُوْنَ اِلَّا الظَّنَّ وَاِنْ هُمْ اِلَّا يَخْرُصُوْنَ ﴿١١٦﴾

(११६) र धर्तीमा अधिकतर यस्ता छन् कि यदि तपाईं उनीहरूको अनुसरण गर्नुहुन्छ भने तिनी तपाईंलाई अल्लाहको मार्गबाट विचलित गरिदिने छन् । उनी मात्र निराधार कल्पनाको अनुसरण गर्दछन् तथा अनुमान लगाउँछन् ।[2]

[1]सूचना तथा घटनाहरूको आधारमा सत्य छ तथा आदेश एवं समस्याहरूको आधारमा न्यायिक छ अर्थात यसको प्रत्येक आदेश तथा निषेध न्यायका नियमहरूमा आधारित छन् , यद्यपि मनुष्य आफ्नो अज्ञानता अथवा शैतानको भ्रमको कारण यस तथ्यको बोध गर्न सक्तैन ।

[2]कुर्आनमा वर्णित यस सत्यताको अवलोकन प्रत्येक कालमा गर्न सकिन्छ । अन्य स्थानमा अल्लाह तआलाले आदेश गरेको छः

﴿وَمَا أَكْثَرُ النَّاسِ وَلَوْ حَرَصْتَ بِمُؤْمِنِينَ﴾

"तपाईंको इच्छाको उपरान्त अधिकतर मानिसहरू विश्वास गर्ने छैनन् ।" (सूरः यूसुफ-१०३)

यसबाट ज्ञात भयो कि सत्य तथा सत्यताको मार्गमा सधैं थोरै नै हुन्छन् । जसबाट यो कुरा पनि सिद्ध हुन्छ कि सत्य तथा असत्यको आधार तर्क तथा प्रमाण हो, मानिसहरूको अधिक अथवा अल्पसंख्या होइन । यस्तो होइन कि जुन कुरोलाई बहुसंख्यकले मानेका हुन्छन् त्यो सत्य होस् तथा अल्पसंख्यक असत्यमा होउन् । बरू कुर्आनद्वारा वर्णित यस सत्यताको आधारमा यो संभव छ कि सत्यगामी अल्पसंख्यक होउन् तथा असत्यवादी बहुसंख्यक । यसको पुष्टि हदीसबाट हुन्छ जसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएको छ कि मेरा अनुयायी ७३ गुटरूमा विभाजित हुनेछन्, जसमध्ये केवल एउटा मात्र गुट स्वर्गमा जानेछ, शेष सबै नरकमा जानेछन् । तथा यस स्वर्गगामी गुटको निशानी भनियो कि जो (ما أنا عليه وأصحابي) "म तथा मेरा सहचरहरूको मार्गमा हिंडने हुनेछन् ।" (अबू दाऊद, किताबुल सून्नः बाब शरह सुन्नः संख्या ४५९६, तिर्मिजी किताबुल ईमान बाब माज़ाअ फी इफ़तराके हाज़ेहिल उम्मः)

إِنَّ رَبَّكَ هُوَ أَعْلَمُ مَن يَضِلُّ عَن سَبِيلِهِۦ وَهُوَ أَعْلَمُ بِالْمُهْتَدِينَ ﴿١١٧﴾

(११७) निःसन्देह तपाईंको प्रभु त्यसलाई राम्ररी जान्दछ, जो त्यसको मार्गबाट विचलित हुन्छ । त्यो तिनीहरूलाई पनि राम्ररी जान्दछ, जो सोझो मार्गमा छन् ।

فَكُلُوا۟ مِمَّا ذُكِرَ ٱسْمُ ٱللَّهِ عَلَيْهِ إِن كُنتُم بِـَٔايَٰتِهِۦ مُؤْمِنِينَ ﴿١١٨﴾

(११८) अतः (जुन जनावर) माथि अल्लाहको नाम लिइन्छ, त्यसलाई खाउ यदि तिमी त्यसका आयतहरूमा विश्वास गर्दछौ भने ।[1]

وَمَا لَكُمْ أَلَّا تَأْكُلُوا۟ مِمَّا ذُكِرَ ٱسْمُ ٱللَّهِ عَلَيْهِ وَقَدْ فَصَّلَ لَكُم مَّا حَرَّمَ عَلَيْكُمْ إِلَّا مَا ٱضْطُرِرْتُمْ إِلَيْهِ ۗ وَإِنَّ كَثِيرًا لَّيُضِلُّونَ بِأَهْوَآئِهِم

(११९) र के आपत्ति छ कि तिमी त्यसलाई नखाउ जसमा अल्लाहको नाम लिइएको छ ? यद्यपि अल्लाह (तआला) ले ती सबै जनावरहरूको विवरण भनिसकेको छ जसलाई

[1]अर्थात् जुन पशुको शिकार गर्दाखेरि, अथवा बलि अथवा वध गर्दाखेरि अल्लाहको नाम लिइन्छ, त्यसलाई खाउ, यदि उनी ती जनावर मध्येका हुन् जसलाई खाने अनुमति छ । यसको अर्थ यो भयो कि जुन जनावरमाथि जानी-जानी अल्लाहको नाम लिइँदैन, ती वैध तथा पवित्र छैनन् । परन्तु यस्तो अवस्था अलग्ग छ जसमा यो शंका छ कि काट्नेले काट्दाखेरि अल्लाहको नाम लियो अथवा लिएन ? यसमा आदेश यो छ कि अल्लाहको नाम लिएर खाऊ । हदीसमा वर्णित छ आदरणीय आयशा (رضی الله عنها) ले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित सोध्नुभयो कि केही मानिसहरू हाम्रो पासमा मासु लिएर आउँछन् (यसबाट तात्पर्य उनी अशिक्षित अरब थिए जो भर्खर-भर्खर मुसलमान भएका थिए तथा इस्लामी शिक्षा तथा नियमहरूसित परिचित हुन पाएका थिएनन्) हामी जान्दैनौं कि उनीहरूले अल्लाहका नाम लिएका छन् अथवा छैनन् ? उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो:

(سمُّوا عليه أنتم وكُلوا) (सहीह बुख़ारी बाब ज़बीहतुल आराब संख्या ५५०७) तिमी अल्लाहको नाम लिएर खाउ । अर्थात् शंकाको अवस्थामा यो छूट छ । यसको यो अर्थ होइन कि हरेक प्रकारका जनावरहरूको मासु बिस्मिल्लाह पढ्नाले उचित हुनेछ । यसबाट बढीभन्दा बढी यो सिद्ध हुन्छ कि मुसलमानहरूको बजार तथा पसलमा पाइने मासु उचित छ । यदि कसैलाई सन्देह तथा शंका छ भने त्यसले खाँदाखेरि बिस्मिल्लाह पढोस् ।

بِغَيْرِ عِلْمٍ ۗ إِنَّ رَبَّكَ هُوَ أَعْلَمُ بِالْمُعْتَدِينَ ﴿١١٩﴾

तिम्रो निम्ति निषेध गरिएको छ ।[1] परन्तु त्यो पनि जब तिमीलाई अत्याधिक आवश्यकता पर्दछ (त उचित छ) तथा यो निश्चित कुरो हो कि धेरैजसो मानिस आफ्ना त्रुटिपूर्ण विचारमा बिना कुनै प्रमाण विचलित पार्दछन्, निःसन्देह (अल्लाह तआला) मर्यादाहीनहरूलाई राम्ररी जान्दछ ।

وَذَرُوا ظَاهِرَ الْإِثْمِ وَبَاطِنَهُ ۚ إِنَّ الَّذِينَ يَكْسِبُونَ الْإِثْمَ سَيُجْزَوْنَ بِمَا كَانُوا يَقْتَرِفُونَ ﴿١٢٠﴾

(१२०) तिमी खुला एवं गुप्त गुनाहहरू (पाप) लाई त्यागिदेउ, निश्चय नै जो पापको कमाई गर्छन उनी आफ्नो पाप गर्नुको प्रतिफल निकटमै दिइनेछन् ।

وَلَا تَأْكُلُوا مِمَّا لَمْ يُذْكَرِ اسْمُ اللَّهِ عَلَيْهِ وَإِنَّهُ لَفِسْقٌ ۗ وَإِنَّ الشَّيَاطِينَ لَيُوحُونَ إِلَىٰ أَوْلِيَائِهِمْ

(१२१) तथा त्यसलाई नखाउ जुन पशुमा (वधको समय) अल्लाहको नाम लिइएको छैन तथा यो (कर्म) आदेशको उल्लंघन हो ।[2] तथा शैतान आफ्ना मित्रहरूलाई प्रेरणा दिन्छन् ताकि तिनी तिमीसित



[1]जसको विवरण यस सूरःको अगाडि आइराखेको छ । यसका अतिरिक्त अन्य सूरः तथा हदीसहरूमा अवैध जनावरहरूको विवरण दिइएको छ । यसको अतिरिक्त शेष वैध छ तथा निषेधितको मासु पनि जीवन रक्षासम्म मात्र प्रयोग गर्ने अनुमति छ ।

[2]अर्थात् जानी-जानी अल्लाहको नाम जुन जनावरमाथि लिइएको छैन त्यसलाई खानु अवज्ञा तथा अनुचित छ । आदरणीय इब्ने अब्बास (رضى الله عنهما) ले यसको यही अर्थ वर्णित गर्नुभएको छ, उहाँ भन्नुहुन्छ कि "जो बिर्सिन्छ त्यसलाई अवज्ञाकारी भनिदैन ।" तथा इमाम बुख़ारीको पनि यही विचार छ तथा यही हनफ़ी समुदायको पनि विचार छ ।

لِيُجَادِلُوكُمْ ۚ وَإِنْ أَطَعْتُمُوهُمْ إِنَّكُمْ لَمُشْرِكُونَ ﴿١٢١﴾

विवाद गरून[1] तथा यदि तिमीले उनीहरूको अनुसरण गर्‍यौ भने तिमी निःसन्देह मिश्रणवादी हुनेछौ ।

أَوَمَن كَانَ مَيْتًا فَأَحْيَيْنَاهُ وَجَعَلْنَا لَهُ نُورًا يَمْشِي بِهِ فِي النَّاسِ كَمَن مَّثَلُهُ فِي الظُّلُمَاتِ لَيْسَ بِخَارِجٍ مِّنْهَا ۚ كَذَٰلِكَ زُيِّنَ لِلْكَافِرِينَ مَا كَانُوا يَعْمَلُونَ ﴿١٢٢﴾

(१२२) तथा यस्तो व्यक्ति जो अघि मृत थियो अनि हामीले त्यसलाई जीवित गर्‍यौं र उसलाई प्रकाश प्रदान गर्‍यौं जसले गर्दा मानिसहरू बीच हिंडडुल गर्छ त्यसको समान हुनसक्दछ जो अन्धकारमा होस् जसबाट उम्कन नसकोस् ?[2] यस्तै काफ़िरहरू (अधर्मी) का लागि जुन कर्म उनीहरू गर्दछन्, सुशोभित बनाइएका छन् ।

[1]शैतानले आफ्ना साथीहरूद्वारा यस कुराको प्रचार गर्‍यो कि यी मुसलमान अल्लाहद्वारा मारिएका जनावर (अर्थात् मृत) लाई त अनुचित तथा आफ्ना हातले काटिएकालाई उचित भन्दछन् तथा दाबी गर्दछन् कि हामी अल्लाहलाई मान्नेहरू हौं । अल्लाह तआलाले भन्नुभयो कि शैतान तथा त्यसका मित्रहरूको प्रचारको पछि नलाग, जुन जनावर मरे अर्थात् बिना अल्लाहको नाम लिई काट्नुभन्दा अघि मारिए (समुद्री मृत जनावरका अतिरिक्त किनभने त्यो मृत पनि वैध छ), किनभने त्यसमाथि अल्लाहको नाम लिइएन, यसकारण त्यसलाई खानु वैध छैन ।

[2]यस आयतमा अल्लाह तआलाले काफ़िरलाई मृतक (मरेको) तथा ईमान भएकाहरूलाई जीवित भनेको छ । यसकारण कि काफ़िर कुफ्रको अपमानको अन्धकारमा भौंतारिरहन्छ तथा त्यसबाट निस्कन नै पाउँदैन जसको परिणाम मृत्यु तथा विनाश हो तथा निष्ठावानहरूको हृदय अल्लाहमा विश्वासको कारणले जीवित रहन्छ, जसबाट त्यसको जीवनको मार्ग प्रकाशमान हुन्छ । तथा त्यो ईमान तथा शुभ सूचनाको मार्गमा अग्रसर रहन्छ जसको परिणाम सफलता र सम्मान हो । यो त्यही विषय हो जसलाई निम्नलिखित आयतहरूमा वर्णन गरिएको छ । ﴿ اللَّهُ وَلِيُّ الَّذِينَ آمَنُوا يُخْرِجُهُم مِّنَ الظُّلُمَاتِ إِلَى النُّورِ ۖ وَالَّذِينَ كَفَرُوا أَوْلِيَاؤُهُمُ الطَّاغُوتُ يُخْرِجُونَهُم مِّنَ النُّورِ إِلَى الظُّلُمَاتِ ۗ أُولَٰئِكَ أَصْحَابُ النَّارِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴾ (البقرة: ٢٥٧)

☆ ﴿ مَثَلُ الْفَرِيقَيْنِ كَالْأَعْمَىٰ وَالْأَصَمِّ وَالْبَصِيرِ وَالسَّمِيعِ ۚ هَلْ يَسْتَوِيَانِ مَثَلًا ﴾ (هود: ٢٤)

﴿ وَمَا يَسْتَوِي الْأَعْمَىٰ وَالْبَصِيرُ ○ وَلَا الظُّلُمَاتُ وَلَا النُّورُ ○ وَلَا الظِّلُّ وَلَا الْحَرُورُ ○ وَمَا يَسْتَوِي الْأَحْيَاءُ وَلَا الْأَمْوَاتُ ۚ إِنَّ اللَّهَ يُسْمِعُ مَن يَشَاءُ ۖ وَمَا أَنتَ بِمُسْمِعٍ مَّن فِي الْقُبُورِ ﴾ (فاطر: ١٩-٢٢)

وَكَذَٰلِكَ جَعَلْنَا فِي كُلِّ قَرْيَةٍ أَكَٰبِرَ مُجْرِمِيهَا لِيَمْكُرُوا فِيهَا ۖ وَمَا يَمْكُرُونَ إِلَّا بِأَنفُسِهِمْ وَمَا يَشْعُرُونَ ﴿١٢٣﴾

(१२३) तथा यसैप्रकार हामीले प्रत्येक वस्तीका ठूला-ठूला पापीहरूलाई षड्यन्त्र रच्नको निम्ति बनायौं ताकि त्यसमा षड्यन्त्र गरून् ।[1] तथा उनी आफ्नै विरूद्धमा षड्यन्त्र रच्दछन् तथा यसको संवेदन (अनुभूति) गर्दैनन् ।[2]

وَإِذَا جَاءَتْهُمْ آيَةٌ قَالُوا لَن نُّؤْمِنَ حَتَّىٰ نُؤْتَىٰ مِثْلَ مَا أُوتِيَ رُسُلُ اللَّهِ ۘ اللَّهُ أَعْلَمُ حَيْثُ يَجْعَلُ رِسَالَتَهُ ۗ سَيُصِيبُ الَّذِينَ أَجْرَمُوا صَغَارٌ عِندَ اللَّهِ وَعَذَابٌ شَدِيدٌ بِمَا كَانُوا يَمْكُرُونَ ﴿١٢٤﴾

(१२४) तथा उनको पासमा जब कुनै आयत आयो त उनीहरूले भने कि हामी कदापि विश्वास गर्ने छैनौं जबसम्म हामीलाई पनि त्यसैको समान दिइँदैन, जुन ईशदूतहरूलाई दिइयो ।[3] अल्लाह राम्ररी जान्दछ कि त्यसले आफ्नो दूतत्व कहाँ राखोस्,[4] शीघ्र नै जसले पाप गरेका छन्, उनीहरू अल्लाहका समीप अपमानित हुनुपर्ने छ तथा जो षड्यन्त्र गरिराखेका छन् त्यसको प्रतिकार घोर यातना छ ।

[1](أكابر) (मुखिया) (أكبر) को बहुवचन हो, जसको तात्पर्य अनिष्ट एवं दुराचारीहरूका प्रमुख हुन्, किनभने ईशदूत तथा सत्यका प्रचारकहरूको विरोधमा तिनै अगाडि आउँछन्, तथा साधारण मानिसहरू उनका अनुयायी हुन्छन् । यसकारण उनको चर्चा विशेषरूपले गरिएको छ, यसको अतिरिक्त सामान्यतः यस्ता मानिसहरू धन एवं वंशमा पनि ठूला एवं प्रतापी हुन्छन् यसकारण सत्यको विरोधमा पनि अग्रगामी हुन्छन् । (यसै विषयको चर्चा सूरः सबाको आयत ३१ देखि ३३ सम्म तथा सूरः जुखरूफ़ आयत २३ एवं सूरः नूहको आयत २२, इत्यादिमा पनि गरिएको छ)

[2]अर्थात् उनका आफ्ना कुकर्महरूका पाप तथा त्यसैप्रकार उनका पछाडि लाग्नेहरूको पाप उनैमाथि पर्नेछ । (यसको अतिरिक्त हेर्नुस् सूरः अनकबूत-१३ तथा सूरः नहल-२५)

[3]अर्थात् उनको पासमा पनि फरिश्ताहरू वह्य (प्रकाशनाहरू) लिएर आउन तथा उनका शिरहरूमा पनि नबूअत तथा रिसालतको मुकुट राखियोस् ।

[4]अर्थात् यो निर्णय गर्नु कि कसलाई नबी बनाइयोस् ? यो त अल्लाहको काम हो किनभने त्यही प्रत्येक कुराको महत्व तथा विशेषतालाई जान्दछ तथा उसैलाई नै ज्ञान छ कि को यस पदको अधिकारी छ ? मक्काको कुनै चौधरी तथा धनवान अथवा आदरणीय अब्दुल्लाह तथा आदरणीय आमिनाको अनाथ पुत्र ?

(१२५) जसलाई अल्लाह सत्यमार्ग देखाउन चाहन्छ त्यसको वक्ष (छाति) लाई इस्लाम (धर्म) को लागि खोलिदिन्छ तथा जसलाई विपथ गर्न चाहन्छ, त्यसको वक्षलाई संकिर्ण तथा संकुचित गरिदिन्छ, मानौं कि त्यो आकाशमा चढिराखेको छ ।[1] यसैप्रकार अल्लाह तिनीहरूलाई घृणित बनाइदिन्छ, जो विश्वास राख्दैनन् ।[2]

فَمَن يُرِدِ اللَّهُ أَن يَهْدِيَهُ يَشْرَحْ صَدْرَهُ لِلْإِسْلَامِ ۖ وَمَن يُرِدْ أَن يُضِلَّهُ يَجْعَلْ صَدْرَهُ ضَيِّقًا حَرَجًا كَأَنَّمَا يَصَّعَّدُ فِي السَّمَاءِ ۚ كَذَٰلِكَ يَجْعَلُ اللَّهُ الرِّجْسَ عَلَى الَّذِينَ لَا يُؤْمِنُونَ ﴿١٢٥﴾

(१२६) यो तिम्रो पालनकर्ताको सोझो मार्ग हो, हामीले आयतहरूको विस्तृत वर्णन त्यस वर्गको लागि गरिदिएका छौं जो शिक्षा प्राप्त गर्दछन् ।

وَهَٰذَا صِرَاطُ رَبِّكَ مُسْتَقِيمًا ۗ قَدْ فَصَّلْنَا الْآيَاتِ لِقَوْمٍ يَذَّكَّرُونَ ﴿١٢٦﴾

(१२७) यिनीहरूकै लागि यिनका पोषककहाँ शान्तिगृह छ तथा त्यही नै तिनका सदाचारहरूको कारण तिनको मित्र हो ।[3]

لَهُمْ دَارُ السَّلَامِ عِندَ رَبِّهِمْ ۖ وَهُوَ وَلِيُّهُم بِمَا كَانُوا يَعْمَلُونَ ﴿١٢٧﴾

(१२८) तथा जुन दिन अल्लाह यी सबैलाई एकत्रित गर्नेछ (तथा भन्नेछ) हे जिन्नहरूका समूह ! तिमीले मानिसहरू मध्येबाट धेरै अपनाइहाल्यौ[4] तथा

وَيَوْمَ يَحْشُرُهُمْ جَمِيعًا يَا مَعْشَرَ الْجِنِّ قَدِ اسْتَكْثَرْتُم مِّنَ الْإِنسِ ۖ وَقَالَ

[1] अर्थात् जुनप्रकार शक्ति लगाएर आकाशमा चढ्नु असम्भव छ, त्यसैप्रकारले जुन व्यक्तिको छातिलाई अल्लाह तआला संकीर्ण गरिदिन्छ त्यसमा तौहीद (एकेश्वरवाद) तथा ईमानको प्रवेश सम्भव छैन यसको अतिरिक्त कि अल्लाहले नै उसको छाती उसको लागि खोलिदेओस् ।

[2] अथवा शैतानलाई उनीमाथि प्रभावशाली गरिदिन्छ ।

[3] अर्थात् जुन प्रकार संसारमा निष्ठावान मानिसहरू अविश्वास एवं पथ विचलनका बाङ्गा मार्गहरूबाट पन्छिएर निष्ठा तथा सोझा मार्गमा अग्रसर रहन्छन्, अब आख़िरतमा पनि उनको लागि सुरक्षा तथा शान्तिको घर छ तथा अल्लाह तआला पनि उनको पुण्यको कारण मित्र तथा सहायता गर्नेछ ।

[4] अर्थात् मनुष्यहरूको एउटा धेरै ठूलो संख्यालाई तिमीले भ्रमित पारी आफ्ना अनुयायी बनायौ, जुन प्रकार अल्लाह तआलाको सूरः यासीनमा आदेश छ, त्यसको अनुवाद यो हो ।

أَوْلِيَاؤُهُم مِّنَ الْإِنسِ رَبَّنَا اسْتَمْتَعَ بَعْضُنَا بِبَعْضٍ وَبَلَغْنَا أَجَلَنَا الَّذِي أَجَّلْتَ لَنَا ۚ قَالَ النَّارُ مَثْوَاكُمْ خَالِدِينَ فِيهَا إِلَّا مَا شَاءَ اللَّهُ ۗ إِنَّ رَبَّكَ حَكِيمٌ عَلِيمٌ ﴿١٢٨﴾

मानव मध्येबाट तिनका मित्रहरुले भन्नेछन्, हे हाम्रो पालनकर्ता ! हामीलाई तिम्रो परस्पर लाभ पुऱ्याउ ।[1] तथा हामी निर्धारित समयलाई जुन तिमीले हाम्रो लागि निर्धारित गऱ्यौ,[2] पुग्यौ । (अल्लाह) भन्नेछ कि तिम्रो स्थान नरक हो जसमा तिमी सधैं बास गर्नेछौ, परन्तु अल्लाहले चाहेकै कुरो क्रियानवीत छ,[3] निःसन्देह तिम्रो स्वामी तत्वदर्शी, सर्वज्ञ छ ।

"हे आदमका सन्तान ! के मैले तिमीलाई सतर्क गरेको थिइन कि शैतानको पूजा नगर, त्यो तिम्रो प्रत्यक्ष शत्रु हो ? तथा यो कि तिमी मेरो उपासना गर्नु, यही सोझो मार्ग हो । एवं यस शैतानले तिम्रो धेरै ठूलो संख्यालाई पथ-विचलित गरिदिएको छ । के तैपनि तिमी बुझ्दैनौ ?" (सूरः यासीनः ६०-६२)

[1]जिन्न तथा मनुष्यहरूले एक-अर्काबाट के लाभ प्राप्त गरे ? यसको दुई भावार्थहरूको वर्णन छ । जिन्नहरूको मानिसहरूबाट लाभान्वित हुन उनीहरूलाई अनुयायी बनाएर उनीबाट आनन्द प्राप्त गर्नु हो तथा मनुष्यहरूको जिन्नहरूबाट लाभान्वित हुनुको अर्थ हो कि शैतानहरूले पापलाई उनको निम्ति सुन्दर बनाइदिए जसलाई उनीहरूले स्वीकार गरे तथा पापको स्वादमा अल्झिरहे । दोस्रो भावार्थ यो हो कि मनुष्य ती दैवी सूचनाहरूको पुष्टि गरिरहे, जुन शैतान तथा जिन्नातको तर्फबाट भविष्यवाणीको रूपमा फैलाइन्छ । अर्थात् यी जिन्नातहरूले मनुष्यहरूलाई मुर्ख बनाएर लाभ प्राप्त गरे तथा मनुष्यहरूको लाभ प्राप्त गर्नु यो हो कि मनुष्य जिन्नातहरूद्वारा भनिएका झूठा तथा निराधार कुराहरूबाट आनन्द लिंदैरहे तथा भविष्यवाणी गर्ने व्यक्तिहरू उनीबाट सांसारिक लाभ गरिरहे ।

[2]अर्थात् केयामत घटित भइसक्यो, जसलाई हामी संसारमा मान्दैनथ्यौं । त्यसको उत्तरमा अल्लाह तआलाले भन्नेछ कि अब नरक नै तिम्रो स्थाई निवासस्थान हो ।

[3]तथा अल्लाहको निर्णय क़ाफिरहरूको लागि नरकको स्थाई यातना नै हो जसलाई त्यसले निरन्तर क़ुर्आन करीममा स्पष्टरूपले वर्णित गरेको छ । छुटबाट कुनै प्रकारको गलत अनुमान लगाउनु हुँदैन किनभने यो छुट अल्लाह तआलाले स्वयं आफ्नो इच्छाको आधारमा वर्णन गरेको छ, यसलाई कुनै अन्य कुराको साथ सम्मिलित गर्न सकिन्न । यसकारण कि यदि क़ाफिरहरूलाई नरकबाट निकाल्न चाहन्छ भने निकाल्न सक्दछ, यसबाट त्यो विवश पनि छैन तथा न कोही अन्य बाधक छ । (ऐसरूत्तफ़ासीर)

وَكَذَٰلِكَ نُوَلِّي بَعْضَ الظَّالِمِينَ بَعْضًا بِمَا كَانُوا يَكْسِبُونَ ﴿١٢٩﴾

(१२९) यसैप्रकार हामीले दुष्कर्मीहरूलाई तिनका कुकर्महरूका कारण परस्पर मित्र बनाइदिन्छौं ।[1]

يَا مَعْشَرَ الْجِنِّ وَالْإِنسِ أَلَمْ يَأْتِكُمْ رُسُلٌ مِّنكُمْ يَقُصُّونَ عَلَيْكُمْ آيَاتِي وَيُنذِرُونَكُمْ لِقَاءَ يَوْمِكُمْ هَٰذَا ۚ قَالُوا شَهِدْنَا عَلَىٰ أَنفُسِنَا ۖ وَغَرَّتْهُمُ الْحَيَاةُ الدُّنْيَا وَشَهِدُوا عَلَىٰ أَنفُسِهِمْ أَنَّهُمْ كَانُوا كَافِرِينَ ﴿١٣٠﴾

(१३०) हे जिन्न तथा मानिसहरूका समूह ! के तिम्रो पासमा तिमी मध्येबाट ईशदूत आएनन्,[2] जो तिम्रा समक्ष हाम्रा आयतहरू पढ्दै गरेका थिए तथा तिमीलाई यस (प्रलय) को दिनको सामना गर्नबाट सावधान गरिराखेका थिए । उनीहरूले भन्नेछन् कि हामी आफ्ना विरूद्ध साक्षी छौं, तथा सांसारिक जीवनले उनीहरूलाई धोका दियो एवं आफ्नो विरूद्ध साक्षी हुनेछन् कि उनी विश्वासहीन थिए ।[3]

ذَٰلِكَ أَن لَّمْ يَكُن رَّبُّكَ مُهْلِكَ الْقُرَىٰ بِظُلْمٍ وَأَهْلُهَا غَافِلُونَ ﴿١٣١﴾

(१३१) (ईशदूत पठाइए) किनभने तिम्रो पालनकर्ताले कुनै ग्रामीणहरूलाई कुनै अत्याचारको कारण विनाश गर्दैन, जबकि त्यसका निवासी अचेत हुन्छन् ।



[1]अर्थात् नरकमा, जस्तो कि अनुवादबाट स्पष्ट छ । दोस्रो भावार्थ यो हो कि जसरी हामीले मनुष्य तथा जिन्नहरूलाई एक अर्काको मित्र तथा सहायक बनायौं, (जस्तो कि पूर्वको आयतमा चर्चा भइसकेको छ) त्यसैप्रकार हामी अत्याचारीहरूसँग व्यवहार गर्दछौं । एक अत्याचारीलाई अर्को अत्याचारीमाथि प्रभावशाली बनाईदिन्छौं, यसप्रकार एउटा अत्याचारीले अर्को अत्याचारीको विनाश गरिदिन्छ तथा एक अत्याचारीको बदला अर्को अत्याचारीद्वारा लिन्छौं ।

[2]रिसालत तथा नबूअतका विषयमा जिन्नात मुनष्यहरूका अधीन छन्, बरू जिन्नातहरूमा नबी आएनन् । परन्तु रसूलहरूका सन्देशवाहक तथा शुभ सन्देश पुऱ्याउने जिन्नातहरूमा हुँदैगरेका छन्, जुन आफ्ना समुदायका जिन्नहरूलाई अल्लाहतिर आमन्त्रित गर्दछन् ।

[3]प्रलय क्षेत्रमा मिश्रणवादी (मुश्रिक) अनेक दाँउपेच चाल्नेछन् । कहिल्यै आफू मिश्रणवादी हुने कुरोलाई नकार्ने छन् (अल अनाम-२३) र कहिले स्वीकार नगरी कुनै उपाय हुनेछैन, जस्तो यहाँ उनको स्वीकृतिको वर्णन गरिएको छ ।

وَلِكُلٍّ دَرَجٰتٌ مِّمَّا عَمِلُوْا ۭ وَمَا رَبُّكَ بِغَافِلٍ عَمَّا يَعْمَلُوْنَ ١٣٢

(१३२) प्रत्येकका लागि त्यसको कर्म अनुसार विभिन्न श्रेणीहरू छन् तथा तिम्रो स्वामी ती कर्महरूबाट अनभिज्ञ (निश्चेत) छैन, जे उनीहरू गरिराखेका छन् ।

وَرَبُّكَ الْغَنِيُّ ذُو الرَّحْمَةِ ۭ اِنْ يَّشَاْ يُذْهِبْكُمْ وَيَسْتَخْلِفْ مِنْۢ بَعْدِكُمْ مَّا يَشَاۗءُ كَمَآ اَنْشَاَكُمْ مِّنْ ذُرِّيَّةِ قَوْمٍ اٰخَرِيْنَ ١٣٣ۭ

(१३३) तथा तिम्रो प्रभु निस्पृह दयानिधि छ,[१] यदि चाहन्छ भने तिम्रो नाश गरिदिन्छ र तिमी पश्चात जसलाई चाहन्छ तिम्रो ठाउँमा राख्न सक्छ जस्तो तिमीलाई एक अन्य वर्गको वंशमा पैदा गरेको छ ।[२]

اِنَّ مَا تُوْعَدُوْنَ لَاٰتٍ ۙ وَّمَآ اَنْتُمْ بِمُعْجِزِيْنَ ١٣٤

(१३४) जुन कुराको लागि तिमीलाई वचन दिइन्छ, त्यो निःसन्देह आउने वस्तु हो, तथा तिमी बाध्य गर्न सक्दैनौं ।[३]

قُلْ يٰقَوْمِ اعْمَلُوْا عَلٰي مَكَانَتِكُمْ اِنِّىْ عَامِلٌ ۚ فَسَوْفَ تَعْلَمُوْنَ ۙ مَنْ تَكُوْنُ

(१३५) (तपाईं भन्नुस् कि हे मेरा वर्ग ! तिमी आफ्नो स्थानमा आफ्नो कर्म गरिराख, म पनि (आफ्नो ठाउँमा) कार्यरत छु ।[४] तिमीलाई शीघ्र नै ज्ञान

[१]त्यो आफ्नो सृष्टिमा निस्पृह छ । तिनीहरूको इच्छुक होइन तथा न त उनीहरूको अर्चनाको उसलाई आवश्यकता छ । उनीहरूको निष्ठा न उसको लागि लाभकारी छ न उनको अविश्वास उसको लागि हानिकारक छ परन्तु आफ्नो यस निस्पृहताको गुणको साथ-साथै आफ्नो सृष्टिको लागि कृपालु छ । त्यसको निस्पृहता, आफ्नो सृष्टिमाथि कृपा गर्नुमा बाधक छैन ।

[२]यो उसको अत्याधिक सामर्थ्य तथा असीम बलको प्रदर्शन हो । जुनप्रकारले उसले पूर्वका समुदायहरूलाई मेटाएर अरू समुदायहरूलाई खडा गर्‍यो, त्यो अहिले पनि यस कुराको सामर्थ्य राख्दछ कि तिमीलाई नाश गर्नसक्छ एवं तिम्रो ठाउँमा यस्तो समुदायलाई पैदा गर्न सक्दछ जो तिमी जस्तो नहोस् । (अत्याधिक जानकारीको लागि हेर्नुस् सूरः निसा-१३३, सूरः इब्राहीम-२०, सूरः फ़ातिर-१५ देखि १७, तथा सूरः महम्मद-३८)

[३]यसबाट तात्पर्य क़ेयामत (प्रलय) हो । "तथा तिमी बाध्य गर्न सक्दैनौं" को अर्थ हो कि त्यसले तिमीलाई पुनः जीवित पार्ने सामर्थ्य राख्दछ, चाहे तिमी मिट्टीको कण-कणमा विलीन होऊ ।

[४]यो अविश्वास तथा अवज्ञामा स्थिर रहनुको आज्ञा होइन, बरू कठोर चेतावनी हो । जस्तो कि अघिका शब्दहरूबाट स्पष्ट छ । जसरी अर्को स्थानमा आदेश गर्‍योः

لَهُۥ عَٰقِبَةُ ٱلدَّارِۚ إِنَّهُۥ لَا يُفۡلِحُ ٱلظَّٰلِمُونَ ١٣٥

भइसक्ने छ कि कसको अन्त यस जगत पश्चात (उत्तम) हुन्छ । नि:सन्देह दुराचारी कहिल्यै सफल हुनेछैन ।[1]

وَجَعَلُواْ لِلَّهِ مِمَّا ذَرَأَ مِنَ ٱلۡحَرۡثِ وَٱلۡأَنۡعَٰمِ نَصِيبٗا فَقَالُواْ هَٰذَا لِلَّهِ بِزَعۡمِهِمۡ وَهَٰذَا لِشُرَكَآئِنَاۖ فَمَا كَانَ لِشُرَكَآئِهِمۡ فَلَا يَصِلُ إِلَى ٱللَّهِۖ وَمَا كَانَ لِلَّهِ فَهُوَ يَصِلُ

(१३६) तथा अल्लाहले जुन कृषि एवं पशु उत्पन्न गर्‍यो उनीहरूले त्यसमध्येबाट केही भाग अल्लाहको बनाइदिए तथा आफ्नो विचार अनुसार भने कि यो अल्लाहको हो र यो हाम्रा देवताहरूको,[2] अनि जुन हाम्रो देवताहरूको (भाग) हो त्यो अल्लाहसम्म पुग्दैन[3] तथा जुन अल्लाहको

﴿ وَقُل لِّلَّذِينَ لَا يُؤۡمِنُونَ ٱعۡمَلُواْ عَلَىٰ مَكَانَتِكُمۡ إِنَّا عَٰمِلُونَ ١٢١ وَٱنتَظِرُوٓاْ إِنَّا مُنتَظِرُونَ ١٢٢ ﴾

"जो ईमान कायम गर्दैनन् उनीसित भनिदिनुस कि तिमी आफ्नो स्थानमा कर्म गर्दैजाउ, हामी पनि कर्म गरिराखेका छौं तथा प्रतीक्षा गर, हामी पनि प्रतीक्षा गरिराखेका छौं ।" (सूर: हुद-१२१, १२२)

[1]जस्तो कि केही समय पश्चात अल्लाह तआलाले आफ्नो वचन सत्य गरेर देखायौ । आठ हिज़रीमा मक्का विजय भयो तथा त्यसको विजय पश्चात अरबका गुट ठूलो संख्यामा दिन-प्रतिदिन मुसलमान हुन प्रारम्भ भयो तथा पूरा अरब महाद्वीप मुसलमानहरूको अधीन भयो । तथा यो सीमा अझै फैलदै तथा बढ्दै गयो ।

[2]यस आयतमा मूर्तिपूजकहरूको त्यस विश्वास तथा कर्मको उदाहरण प्रस्तुत गरिदैछ, जुन उनीहरूले स्वयं रचेका थिए । उनीहरू कृषिको पैदावार तथा पशुहरूबाट केही भाग अल्लाहको लागि तथा केही भाग स्वयं रचित तथा कथित देवताहरूको नाममा निकालिदिन्थे । अल्लाहको भागलाई अतिथि भिक्षु एवं सम्बन्धिहरूको लागि व्यय गर्दथे । अनि यदि मूर्तिहरूको भागमा अनुमानित पैदावार हुन्नथ्यो भने अल्लाहको भागबाट निकालेर त्यसमा सम्मिलित गर्दथे तथा यदि त्यसको विपरीत घटित हुन्थ्यो भने मूर्तिहरूको भागबाट निकाल्दैनथे तथा भन्थे कि अल्लाह त निस्पृह छ ।

[3]अर्थात् अल्लाहको भागमा कमी भएको परिस्थितिमा मूर्तिहरूको भागबाट निकाली दान तथा पुण्यको काम गर्दैनथे ।

إِلَىٰ شُرَكَآئِهِمْ سَآءَ مَا يَحْكُمُونَ ﴿١٣٦﴾

हो त्यो उनका देवताहरूसम्म पुग्दछ ।[1] उनी नराम्रा निर्णय दिइराखेका छन् ।

وَكَذَٰلِكَ زَيَّنَ لِكَثِيرٍ مِّنَ الْمُشْرِكِينَ قَتْلَ أَوْلَادِهِمْ شُرَكَآؤُهُمْ لِيُرْدُوهُمْ وَلِيَلْبِسُوا عَلَيْهِمْ دِينَهُمْ وَلَوْ شَآءَ اللَّهُ مَا فَعَلُوهُ فَذَرْهُمْ وَمَا يَفْتَرُونَ ﴿١٣٧﴾

(१३७) यसैप्रकार धेरै मिश्रणवादीहरू (मूर्तिपूजकहरू) का लागि उनका देवताहरूले उनको विनाश गर्न एवं उनीमाथि उनका धर्मलाई संदिग्ध[2] बनाउनका निम्ति उनीहरूका सन्तानको हत्यालाई सुसज्जित बनाइदिएका छन् ।[3] तथा यदि अल्लाहले चाहेको भए तिनीहरू यो गर्दैनथे ।[4] अत: तपाईं यिनलाई तथा यिनले स्वयं रचेको कुरोलाई त्याग दिनुस् ।

وَقَالُوا هَٰذِهِۦٓ أَنْعَٰمٌ وَحَرْثٌ حِجْرٌ لَّا يَطْعَمُهَآ إِلَّا مَن نَّشَآءُ بِزَعْمِهِمْ وَأَنْعَٰمٌ حُرِّمَتْ ظُهُورُهَا

(१३८) तथा उनीहरूले भने कि यो पशु एवं कृषि निषेध छ । यिनलाई त केवल त्यसैले खान सक्छ जसलाई हामी चाहन्छौं[5] यस्तो उनीहरू स्वयं आफ्नो विचारले भन्दछन् तथा केही पशुको पिठ्यूँ

[1]यदि मूर्तिहरूको निर्धारित भागमा कमी हुन्छ भने उनीहरू अल्लाहको निर्धारित भागबाट लिएर मूर्तिहरूका आवश्यकतामा व्यय गर्दछन् । अर्थात् अल्लाहको सापेक्ष मूर्तिहरूको भय उनको हृदयमा धेरै थियो जसको दर्शन आजका मूर्तिपूजकहरूको व्यवहारबाट पनि गर्न सकिन्छ ।

[2]अर्थात् उनको धर्ममा शिर्कलाई सम्मिलित गरिदेऊन् ।

[3]यो संकेत उनका नानीहरू (बालिकाहरू) लाई जीवित गाडिदिन अथवा मूर्तिहरूलाई बलि स्वरूप भेट चढाउनुतिर छ ।

[4]अर्थात् अल्लाह तआलाले आफ्नो अधिकार शक्ति एवं सामर्थ्यको आधारमा तिनको विचार तथा अधिकारहरूको स्वतन्त्रतालाई समाप्त गरिदिए, त नि:सन्देह यिनी त्यो कार्य गर्दैनथे जुन वर्णित भए । परन्तु यस्तो गर्नु दबाव हुन्थ्यो, जसमा मनुष्यको परीक्षा हुन सक्दैनथ्यो, जबकि अल्लाह तआला मनुष्यको विचार तथा अधिकारको स्वतन्त्रता प्रदान गरेर परीक्षा लिन चाहन्छ, यसकारण अल्लाहले दबाव दिएन ।

[5]यसमा तिनको मूर्खता कालको विधान तथा अनृतका तीन अन्य रूपहरूको वर्णन गरिएको छ । (अर्थात् निषेध) यद्यपि धातु हो किन्तु कर्म अर्थात् निषेधितको अर्थमा छ, यो प्रथम रूप हो कि पशु अथवा कुनै खेतको पैदावारको प्रयोग निषेधित गर्दथे तथा भन्थे कि

وَأَنْعَامٌ لَّا يَذْكُرُونَ اسْمَ اللَّهِ عَلَيْهَا افْتِرَاءً عَلَيْهِ ۚ سَيَجْزِيهِم بِمَا كَانُوا يَفْتَرُونَ ﴿١٣٨﴾

(अर्थात् सवारी) वर्जित छ[1] तथा केही पशुमाथि (वध गर्दा) अल्लाहको नाम लिदैनथे अल्लाहमाथि झूठो आरोप लगाउनका लागि[2] अल्लाहले उनीहरूलाई उनको आरोपको प्रतिकार शीघ्र दिनेछ ।

وَقَالُوا مَا فِي بُطُونِ هَٰذِهِ الْأَنْعَامِ خَالِصَةٌ لِّذُكُورِنَا وَمُحَرَّمٌ عَلَىٰ أَزْوَاجِنَا ۖ وَإِن يَكُن مَّيْتَةً فَهُمْ فِيهِ شُرَكَاءُ ۚ سَيَجْزِيهِمْ وَصْفَهُمْ ۚ إِنَّهُ حَكِيمٌ عَلِيمٌ ﴿١٣٩﴾

(१३९) तथा उनीहरूले भने कि यी पशुहरूको गर्भमा जे छ त्यो विशेषरूपले हाम्रा पुरूषहरूको लागि हो तथा हाम्रा पत्नीहरूको लागि निषेध छ । तथा यदि मृत छ भने सबै त्यसमा भागीदार छन् ।[3] त्यो (अल्लाह) ले उनको यस कथनको प्रतिफल शीघ्र दिनेछ,[4] यथावत त्यो निपुण ज्ञाता छ ।

यसलाई त्यसैले खान्छ जसलाई हामी अनुमति दिनेछौं । यो अनुमति मूर्तिहरूका सेवक तथा पुरोहितहरूको लागि नै हुन्थ्यो ।

[1]यो दोस्रो रूप हो कि उनी विभिन्न पशुहरूको मूर्तिहरूका नाममा मुक्त गर्दथे जसबाट भारवाहन अथवा सवारीको काम लिंदैनथे जस्तो कि "बहीरः" तथा "साइबा" आदिको सविस्तार विवरण पहिला नै भइसकेको छ ।

[2]यो तेस्रो रूप हो कि उनी वध गर्दाखेरी मात्र मूर्तिहरूको नाम लिन्थे, अल्लाहको नाम लिंदैनथे, केहीले यसको भावार्थ यो लिएका छन् कि यी पशुहरूमाथि सवार भएर उनी "हज्"को लागि जाँदैनथे, जे होस् यी सबै उनका स्वयं रचित कुराहरू थिए जसलाई उनीहरू अल्लाहको आदेश सिद्ध गर्न चाहन्थे ।

[3]यो एउटा अन्य रूप हो कि जुन पशु उनीहरू आफ्ना मूर्तिहरूको नाममा दान गर्दथे, यिनीमध्ये केहीको विषयमा भन्थे कि यिनको दूध तथा तिनका गर्भबाट जुन जन्मजात जीवित बच्चा हाम्रा पुरूषहरूको लागि उचित छ, स्त्रीहरूको लागि वर्जित छ । हो यदि बच्चा मरेको अवस्थामा पैदा हुन्छ भने त्यसलाई खानमा स्त्री-पुरूष समान छन् ।

[4]अल्लाह तआलाले भन्यो कि यिनी मिथ्यालाप गर्दछन् तथा अल्लाहमाथि झूठा आरोप लगाउँछन्, त्यसमा शीघ्र अल्लाह तआलाले उनीहरूलाई दण्ड दिनेछ । त्यो आफ्नो निर्णयमा पूर्ण सक्षम छ । तथा आफ्ना भक्तहरूको विषयमा राम्ररी ज्ञान राख्नेवाला छ तथा आफ्नो ज्ञान तथा सामर्थ्य अनुसार प्रतिफल एवं दण्डको प्रबन्ध गर्नेछ ।

قَدْ خَسِرَ الَّذِيْنَ قَتَلُوْٓا اَوْلَادَهُمْ سَفَهًا بِغَيْرِ عِلْمٍ وَّ حَرَّمُوْا مَا رَزَقَهُمُ اللّٰهُ افْتِرَآءً عَلَى اللّٰهِ ۭ قَدْ ضَلُّوْا وَمَا كَانُوْا مُهْتَدِيْنَ ﴿١٤٠﴾

(१४०) उनीहरू हानिमा परे जसले बिना ज्ञान मूर्खताका कारण आफ्ना सन्तानको हत्या गरे तथा अल्लाहले जुन जीविका प्रदान गर्‍यो त्यसलाई वर्जित गरे अल्लाहमाथि झूठा आरोप लगाउनको कारण, उनीहरू विचलित भए तथा सत्यमार्गमा रहेनन् ।

وَهُوَ الَّذِيْٓ اَنْشَاَ جَنّٰتٍ مَّعْرُوْشٰتٍ وَّغَيْرَ مَعْرُوْشٰتٍ وَّالنَّخْلَ وَالزَّرْعَ مُخْتَلِفًا اُكُلُهٗ وَالزَّيْتُوْنَ وَالرُّمَّانَ مُتَشَابِهًا وَّغَيْرَ مُتَشَابِهٍ ۭ كُلُوْا مِنْ ثَمَرِهٖٓ اِذَآ اَثْمَرَ وَاٰتُوْا حَقَّهٗ يَوْمَ حَصَادِهٖ ڮ وَلَا تُسْرِفُوْا ۭ اِنَّهٗ لَا يُحِبُّ الْمُسْرِفِيْنَ ﴿١٤١﴾

(१४१) त्यही नै हो जसले लहराहरू तथा लहराहरू नभएका बगैंचाहरू पैदा गर्‍यो[१] तथा खजूर एवं विभिन्न खेतीहरू जसका स्वाद विभिन्न प्रकारका छन् । तथा जैतून तथा अनार जुन मिल्दा-जुल्दा पनि हुन्छन् र हुँदैनन् पनि[२] जब फल दिन्छन् त तिमी यिनलाई खाउ तथा फसल काट्नु तथा त्यसलाई स्याहार्ने दिनमा त्यसको देय (हक) तिर[३] तथा अपव्यय नगर ।[४] निःसन्देह अल्लाह

[१](معروشات) (मअरूशात) को धातु (अर्श) हो, जसको अर्थ माथि उचाल्नु हो । तात्पर्य केही वृक्षका लताहरू हुन् जुन (छाप्रा छानो आदि) माथि सारिन्छन् । जस्तै अंगूर तथा केही तरकारीका लहराहरू छन् । केही लताहरू जुन माथि सारिदैंनन्, वरू धर्तीमा फुल्छन्, फल्छन् । जस्तै खरबूजा तथा तरबुजा आदिका लहराहरू छन् । अथवा तना (डाँठहरू) भएका वृक्ष हुन्, जो लताको रूपमा हुँदैनन् । यी सबै लताहरू, वृक्ष तथा खजूरका वृक्ष एवं कृषि, जसका स्वाद एक-अर्काबाट भिन्न हुन्छन् तथा जैतून एवं अनार, सबैलाई पैदा गर्ने अल्लाह हो ।

[२]यसको लागि हेर्नुस्, आयत संख्या ९९ को व्याख्या ।

[३]अर्थात् जब अन्न-बाली काटेर सफा गर्छौ, तथा वृक्षबाट फल टिपिसकेको हुन्छौ, तब उसको देय तिरिदेउ । यसबाट तात्पर्य केही विद्वानहरूका निकट स्वेच्छादान हो, केहीका निकट अनिवार्य दान अर्थात् दशौं भाग (तराईको भूमिको उपज होस्) अथवा बिसौं भाग (यदि धर्ती इनार, टयूवेल अथवा नहरको पानीले सिंचाई गरिन्छ)

[४]अर्थात् दान-पुण्य पनि शक्तिभन्दा धेरै नगर, यस्तो नहोस् कि भोलि तिमीलाई नै आवश्यक परोस्, केही विद्वानहरू भन्छन् कि यसको सम्बन्ध अधिकारीहरूसित छ तथा दान तथा अनिवार्य धर्मदानको वसूलीमा सीमाको उल्लंघन नगर तथा इमाम इब्ने कसीर भन्नुहुन्छ कि आयतका शब्दहरूबाट स्पष्ट छ तथा अधिक उचित यही छ कि खानामा अधिक व्यय नगर

अपव्ययकारिसित प्रेम गर्दैन ।[1]

وَمِنَ الْأَنْعَامِ حَمُولَةً وَفَرْشًا كُلُوا مِمَّا رَزَقَكُمُ اللَّهُ وَلَا تَتَّبِعُوا خُطُوَاتِ الشَّيْطَانِ إِنَّهُ لَكُمْ عَدُوٌّ مُبِينٌ ﴿١٤٢﴾

(१४२) तथा पशुहरूमध्ये केही भारी बोक्ने योग्य तथा केही धर्तीसँग संलग्न (सानो) बनायो ।[२] खाउ जे तिमीलाई अल्लाहले दिएको छ ।[३] तथा शैतानका पद चिन्हहरूको अनुसरण नगर ।[४] वस्तुतः त्यो तिम्रो शत्रु हो ।

ثَمَانِيَةَ أَزْوَاجٍ مِنَ الضَّأْنِ اثْنَيْنِ

(१४३) त्यसले आठ प्रकारको जोडी (बनायो)[५]

किनभने अधिक खानु शरीर तथा बुद्धि दुबैका लागि हानिकारक छ । व्ययका यी सबै भाव आ-आफ्नै स्थानमा उचित छन्, यसकारण यो सम्पूर्ण भावार्थको तात्पर्य हुनसक्दछ ।

[1]अतः अपव्यय कुनै कुरामा प्रिय छैन, दान-पुण्यको कार्यमा अथवा अन्य कुनै कार्यमा । प्रत्येक कार्यमा मध्यम तथा सीमाभित्र शक्ति अनुसार उचित तथा प्रिय छ र यसैमा जोड दिइएको छ ।

[२] (حَمُولَةً) भारवाहकसित तात्पर्य ऊँट, गोरु तथा खच्चर आदि छन् । (فرشا) सित तात्पर्य ती पशु हुन जस्तै भेंडा, बाखा, दुम्बा आदि जसको दूध तिमी पिउँछौ अथवा मासु खान्छौ ।

[३]अर्थात् फल अनाज तथा पशुहरूबाट, यी सबैलाई अल्लाहले पैदा गरेको छ र तिनीहरूलाई तिम्रा निम्ति भोजन बनाएको छ ।

[४]जसरी मूर्तिपजक यसका अनुगामी बने तथा अवर्जित पशुलाई पनि आफ्ना लागि वर्जित गरे अर्थात् अल्लाहद्वारा उचित गरिएको कुरोलाई अनुचित तथा अनुचितलाई उचित गर्नमा शैतानका अनुसरण गरेका छन् ।

[५]अर्थात् 'त्यसै अल्लाहले आठ जोडी सृष्टि गऱ्यो ।' यस आयतमा 'अजवाज़' शब्दको प्रयोग गरिएको छ, जुन 'ज़ौज' को बहुवचन हो । एकै जातिका भाले तथा पोथीलाई 'ज़ौज' भन्दछन् तथा ती दुबै मध्ये एउटालाई पनि 'ज़ौज' भन्ने गरिएको छ किनभने प्रत्येक एक अर्काको 'ज़ौज' हुन्छ । कुरआनमा यस स्थानमा पनि 'अज़वाज' प्रत्येकको लागि नै प्रयोग भएको छ अर्थात् आठ पशु अल्लाहले पैदा गऱ्यो जो आपसमा एक-अर्काका जोडी हुन् । यो होइन कि आठ जोडी पैदा गऱ्यो, यसप्रकार उनको संख्या १६ पुग्नेछ जबकि आयतको अगाडी भाग अनुसार ठीक छैन ।

وَمِنَ الْمَعْزِ اثْنَيْنِ ۗ قُلْ آلذَّكَرَيْنِ حَرَّمَ أَمِ الْأُنثَيَيْنِ أَمَّا اشْتَمَلَتْ عَلَيْهِ أَرْحَامُ الْأُنثَيَيْنِ ۖ نَبِّئُونِي بِعِلْمٍ إِن كُنتُمْ صَادِقِينَ ﴿١٤٣﴾

भेंडीमा दुई, बाख्रामा दुई,[1] भन्नुस् कि अल्लाहले दुबैका भालेलाई वर्जित गरेको छ अथवा दुबैको पोथीलाई ? अथवा त्यसलाई जुन दुबै पोथीको गर्भाशयमा सम्मिलित छ ?[2] मलाई ज्ञानको आधारमा भन यदि तिमी साँचो हौ भने ।[3]

وَمِنَ الْإِبِلِ اثْنَيْنِ وَمِنَ الْبَقَرِ اثْنَيْنِ ۗ قُلْ آلذَّكَرَيْنِ حَرَّمَ أَمِ الْأُنثَيَيْنِ أَمَّا اشْتَمَلَتْ عَلَيْهِ أَرْحَامُ الْأُنثَيَيْنِ ۖ أَمْ كُنتُمْ شُهَدَاءَ إِذْ وَصَّاكُمُ اللَّهُ بِهَٰذَا ۚ فَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا لِّيُضِلَّ النَّاسَ بِغَيْرِ عِلْمٍ ۗ إِنَّ

(१४४) तथा दुई ऊँटको जातिबाट र दुई गाईको जातिबाट, भन्नुस् कि के उसले दुबै भालेलाई हराम गरेको छ या दुबै पोथीलाई ? वा त्यसलाई जुन दुबै पोथीको पेटमा छ ? के तिमी त्यसबेला उपस्थित थियौ जब अल्लाहले यसको आदेश दियो ?[4] अतः त्यसभन्दा बढी अत्याचारी को होला जो अल्लाहमाथि मिथ्या आरोप लगाउँछ[5] ताकि अज्ञानपूर्वक

---

[1]यो आठको पूरक हो तथा तात्पर्य दुई प्रकारले भाले तथा पोथी हो अर्थात् भेडीबाट भाले तथा पोथी तथा बाख्राबाट भाले-पोथी पैदा गरे । (भेंडामा दुम्बा पनि सम्मिलित छ)

[2]मूर्तिपूजक स्वयं नै केही पशुहरूलाई आफ्नो निम्ति अवैध गर्ने गर्दथे, त्यसको आधारमा अल्लाह तआला सोधिरहेको छ कि अल्लाह तआलाले तिनका भालेहरूलाई निषेध गर्‍यो अथवा त्यस बच्चालाई जुन दुबै पोथीहरूको गर्भमा छ ? अर्थ यो हो कि अल्लाहले त कुनैलाई अवैध गरेको छैन ।

[3]तिम्रो पासमा अवैध गर्ने सम्बन्धमा कुनै विश्वस्त प्रमाण छ भने प्रस्तुत गर कि ‘वहिरः’, ‘सायबा’, ‘बसीलः’ तथा ‘हाम’ आदि यस प्रमाणका अनुसार अवैध छन् ।

[4]अर्थात् तिमी जे-जति पशुहरूलाई अवैध गरिदिन्छौ, के जब अल्लाहले अवैध हुने कुरोको आदेश दिएको थियो त तिमी त्यसको पासमा उपस्थित थियौ ? अर्थात् अल्लाहले यिनलाई निषेधित गर्ने आदेश दिएन । यो सबै तिम्रो झूठो कुरो हो तथा अल्लाहमाथि मिथ्यारोपण गर्दछौ ।

[5]अर्थात् यही सवभन्दा ठूलो अत्याचार हो । हदीसमा वर्णित छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि मैले अम्र बिन लुहलाई नरकमा आन्द्रा झिकिराखेको देखें । उसले सर्वप्रथम मूर्तिहरूको नाममा “वसीला” तथा “हाम” आदि पशु छाड्ने श्रृंखला आरम्भ गर्‍यो । (सहीह बुख़ारी तफ़सीर सूरः मायदः, मुस्लिम किताबुल जन्नः) इमाम इब्ने कसीर भन्नुहुन्छ यो अम्र बिन लुह, खुज़ाआ क़बीलाका नाइकेहरू मध्येबाट थियो, जो जुरहम क़बीला पश्चात ख़ाना-ए-काअबाको संरक्षक बनेको थियो ।

اللهَ لَا يَهْدِي الْقَوْمَ الظّٰلِمِينَ ﴿١٤٤﴾

मानिसहरूलाई कुपथ बनाओस् । निःसन्देह अल्लाह अत्याचारीहरूलाई मार्गदर्शन दिँदैन ।

قُلْ لَّآ اَجِدُ فِيْ مَآ اُوْحِيَ اِلَيَّ مُحَرَّمًا عَلٰى طَاعِمٍ يَّطْعَمُهٗٓ اِلَّآ اَنْ يَّكُوْنَ مَيْتَةً اَوْ دَمًا مَّسْفُوْحًا اَوْ لَحْمَ خِنْزِيْرٍ فَاِنَّهٗ رِجْسٌ اَوْ فِسْقًا اُهِلَّ لِغَيْرِ اللّٰهِ بِهٖ ۚ فَمَنِ اضْطُرَّ غَيْرَ بَاغٍ وَّلَا عَادٍ فَاِنَّ رَبَّكَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٤٥﴾

(१४५) भन्नुस् कि मलाई जुन आदेश गरिएको छ त्यसमा कुनै भक्षीको लागि कुनै खाद्य वर्जित पाउन्न, परन्तु त्यसबाहेक जुन मृत होस् अथवा बगिराखेको रगत अथवा सुँगुरको मासु, यसकारण कि त्यो घृणित अपवित्र छ अथवा जुन कुरो अमर्यादित होस्, जसमाथि अल्लाहको अतिरिक्त अरू कसैको नाम लिइएको होस्,[1] अनि यसमा पनि जो कोही विवश अथवा असहाय अवस्थामा होस् परन्तु अवज्ञाकारी तथा उल्लघंनकारी नहोस् त निश्चय नै तिम्रो पालनकर्ता अत्यन्त क्षमाशील, दयावान छ ।

---

उसले सर्वप्रथम इब्राहीमको धर्ममा परिवर्तन गर्‍यो तथा हिजाजमा मूर्तिहरू स्थापित गरेर मानिसहरूलाई मूर्तिपूजा गर्ने आमन्त्रण गर्‍यो तथा रीतिरीवाजलाई प्रचलित गर्‍यो (इब्ने क़सीर) अर्थात आयतको उद्देश्य यो हो कि अल्लाह तआ़लाले वर्णित उपरोक्त आठ प्रकारका पशु पैदा गरी भक्तहरूमाथि उपकार गरेको छ, तिनीमध्येबाट केहीलाई स्वयं निषेध गर्नु अल्लाहको उपकारलाई अस्वीकार गर्नु तथा शिर्कको कार्य हो तथा यसको कर्ता मिश्रणवादी भनिनेछ ।

[1]यस आयतमा जुन चार वर्जितको वर्णन छ त्यसको वर्णन सूरः बक़रःको आयत-१७३ को व्याख्यामा विस्तारपूर्वक भइसकेको छ । यहाँनिर यो बुँदा स्पष्ट गरिने योग्य छ कि यहाँ यी चार अवैधको सीमाको रूपमा वर्णित गरियो अर्थात यिनका अतिरिक्त सबै उचित छन् । जबकि वास्तविकता यो छ कि धार्मिक नियमहरूमा यी चारका अतिरिक्त पनि कैयन् वर्जित छन् । अनि यहाँ सीमित किन गरियो ? कुरा वास्तवमा यो हो कि यसभन्दा पूर्व मूर्तिपूजकहरूका मूर्खता कालका रीतिहरू तथा तिनका खण्डनको वर्णन भइराखेको थियो । तिनैमध्ये केही पशुहरूको वर्णन आएको छ, जुन उनीहरूले स्वयं आफूमाथि वर्जित गरेका थिए । यस विषयमा यो भनिदैछ कि म माथि जे प्रकाशनाहरू (वह्‌यी) द्वारा विदित भइराखेको छ, त्यसमा यी वर्जित त उचित छन् अर्थात तिनी वर्जित छैनन्, किनभने अल्लाहले जुन वर्जितको वर्णन गरेको छ, त्यसमा यी सम्मिलित छैनन् । यदि तिनी निषेधित भएको भए अल्लाह तआ़लाले तिनको वर्णन अवश्य गर्ने थियो । इमाम शौकानीले यसलाई यसप्रकार स्पष्ट गर्नुभएको छ कि यदि यो आयत मक्की (मक्कामा अवतरित भएको) नभएको भए, त अवश्य निषेधको यो सीमा स्वीकार गर्न सकिन्थ्यो । परन्तु यसको पश्चात स्वयं क़ुरआनले सूरः अल-माइदःमा केही अन्य अवैधको वर्णन गरेको छ त अब तिनी पनि यसमा सम्मिलित हुनेछन् । यसको अतिरिक्त नबी सल्लल्लाहु अलैहि वसल्लमले पशुपंक्षीहरूको वैध-अवैधको ज्ञान गर्नुका

وَعَلَى الَّذِينَ هَادُوا حَرَّمْنَا كُلَّ ذِي ظُفُرٍ ۖ وَمِنَ الْبَقَرِ وَالْغَنَمِ حَرَّمْنَا عَلَيْهِمْ شُحُومَهُمَا إِلَّا مَا حَمَلَتْ ظُهُورُهُمَا أَوِ الْحَوَايَا أَوْ مَا اخْتَلَطَ بِعَظْمٍ ۚ ذَٰلِكَ جَزَيْنَاهُم بِبَغْيِهِمْ ۖ وَإِنَّا لَصَادِقُونَ ﴿١٤٦﴾

(१४६) तथा हामीले यहूदीहरूका लागि नङ्ग्रा भएका जनावर वर्जित गरिदियौं[1] तथा गाई एवं बाख्राको बोसो उनीहरूका लागि वर्जित गरिदिएका थियौं । परन्तु जुन दुबैको पिठ्यूँ एवं आन्द्राहरूमा हुन्छन् अथवा जे केही हाडसित टाँसिएको हुन्छ,[2] यो हामीले उनको (धर्म) द्रोहको प्रतिकार दियौं,[3] तथा हामी सत्यवादी हौं ।[4]

فَإِن كَذَّبُوكَ فَقُل رَّبُّكُمْ ذُو رَحْمَةٍ وَاسِعَةٍ وَلَا يُرَدُّ بَأْسُهُ

(१४७) यदि उनी तपाईंलाई झुठ्लाउँछन् भने भन्नुस् कि तिम्रो स्वामी (अल्लाह) को कृपा अति

---

नियम भन्नुभएको छ र जसको स्पष्टीकरण पनि उपरोक्त वर्णित आयतको व्याख्यामा उपस्थित छ । (أو فسقا) को सम्बन्ध (لحم خنزير) सित छ यसकारण अर्थ छ (أي ذبح على الأصنام) "त्यो पशु जुन मूर्तिहरूको नाममा अथवा उनका थानहरूमा उनको निकटता प्राप्त गर्नको लागि बलि चढाइन्छ ।" अर्थात् यस्ता पशुहरूलाई यद्यपि बलि चढाउँदाखेरि अल्लाहको नाम किन नलिएको होस्, तैपनि वर्जित, किनभने तिनीबाट अल्लाहको निकटता होइन, अल्लाहको अतिरिक्त अन्यको निकटता प्राप्त गर्नुको उद्देश्य छ । फिस्क़ (भ्रष्टता) अल्लाहको आज्ञापालनबाट पन्छिनुको नाम हो । प्रभुले आदेश दिएको छ कि उसको नाममा जनावर बलिदान गरियोस तथा उसैको निकटता, प्रसन्नता प्राप्त गर्नको निम्ति गरियोस्, यदि यस्तो गरिन्न भने यो अवज्ञा तथा मिश्रणवाद हो ।

[1]नङ्धारीसित तात्पर्य बिना खुर फाटेका पशु तथा ती पंक्षी हुन् जसका औंलाहरू अलग-अलग हुँदैनन् । जस्तै ऊँट, शुतुरमुर्ग, हाँस, काग आदि । केही वृद्धजनहरूले यसको अर्थ खुर भएको पशु एवं शिकारी पंक्षी लिएका छन् जुन पन्जाले शिकार गर्दछन् । (कुर्तबी)

[2]अर्थात् जुन बोसो गाई अथवा बाख्राको पिठ्यूँमा हुन्छ अथवा दुम्बाका पुठ अथवा आन्द्राहरू वा हड्डीहरूसित टाँसिएको हुन्छ । बोसोको त्यो मात्रा उचित थियो ।

[3]यी कुराहरू हामीले दण्डको रूपमा उनीमाथि वर्जित गरेका थियौं अर्थात् यहूदीहरूको यो दावी कि आदरणीय याकूबले आफूमाथि निषेध गरेका थिए, तथा हामी त उनको अनुकरणमा वर्जित ठान्दछौं, ठीक होइन ।

[4]यसको अर्थ यो हो कि यहूदी वस्तुतः आफ्नो दाबीमा झुठा छन् ।

عَنِ الْقَوْمِ الْمُجْرِمِينَ ﴿١٤٧﴾

विस्तृत छ ।[1] तथा उसको यातना पापीहरूबाट फेरिन्न ।[2]

سَيَقُولُ الَّذِينَ أَشْرَكُوا لَوْ شَاءَ اللَّهُ مَا أَشْرَكْنَا وَلَا آبَاؤُنَا وَلَا حَرَّمْنَا مِن شَيْءٍ ۚ كَذَٰلِكَ كَذَّبَ الَّذِينَ مِن قَبْلِهِمْ حَتَّىٰ ذَاقُوا بَأْسَنَا ۗ قُلْ هَلْ عِندَكُم مِّنْ عِلْمٍ فَتُخْرِجُوهُ لَنَا ۖ إِن تَتَّبِعُونَ إِلَّا الظَّنَّ وَإِنْ أَنتُمْ إِلَّا تَخْرُصُونَ ﴿١٤٨﴾

(१४८) मिश्रणवादीहरूले भन्नेछन् कि यदि अल्लाहले चाहेको भए हामी तथा हाम्रा पूर्वज मिश्रण गर्दैनथ्यौं, न कुनै वस्तुलाई वर्जित बनाउँदथ्यौं ।[3] यसैप्रकार यिनीभन्दा पूर्वका मानिसहरूले झुठ्लाए यहाँसम्मकि हाम्रो कोप (यातना) चाखे,[4] भन्नुस कि के तिनीहरूको पासमा कुनै ज्ञान छ त्यसो भए त्यसलाई हाम्रो लागि निकाल (व्यक्त गर) ।[5] तिमी कल्पनाको अनुसरण गर्दछौ तथा मात्र अनुमान लगाउँछौ ।

قُلْ فَلِلَّهِ الْحُجَّةُ الْبَالِغَةُ ۖ فَلَوْ شَاءَ لَهَدَاكُمْ أَجْمَعِينَ ﴿١٤٩﴾

(१४९) तपाईं भन्नुस् कि तसर्थ अल्लाहकै तर्क प्रभावशाली छ, अतः यदि त्यो चाहन्थ्यो भने तिमी सबैलाई मार्गदर्शन दिनसक्थ्यो ।

قُلْ هَلُمَّ شُهَدَاءَكُمُ الَّذِينَ يَشْهَدُونَ أَنَّ اللَّهَ حَرَّمَ هَٰذَا ۖ فَإِن شَهِدُوا

(१५०) तपाईं भन्नुस् कि आफ्ना ती साक्षीहरूलाई ल्याउ जो यो साक्ष्य दिन्छन् कि अल्लाहले यसलाई

---

[1]यसकारण झुठ्लाउने कुरोमा पनि यातना दिनुमा शीघ्रता गर्दैन ।

[2]अर्थात समय दिनुको अर्थ यो होइन कि अल्लाहको यातनाबाट सधै सुरक्षित छन्, त्यो जहिलेपनि यातना दिने निर्णय लिनेछ, त त्यसलाई कसैले काट्न सक्ने छैन ।

[3]यो त्यही भ्रम हो जुन अल्लाहको इच्छा एवं प्रसन्नतालाई एकार्थ बुझ्नुको कारण हुन्छ । यद्यपि एक-अर्काबाट भिन्न छन् जसलाई पूर्वमा स्पष्ट गरिसकिएको छ ।

[4]अल्लाह तआलाले यस भ्रमको निराकरण यसप्रकार गरेको छ कि यो शिर्क अल्लाहको प्रसन्नताको द्योतक थियो भने उनीमाथि प्रकोप किन आयो ? अल्लाहको प्रकोप यस कुराको प्रमाण हो कि अल्लाहको इच्छा अन्य कुरो हो तथा प्रसन्नता अन्य कुरा हो ।

[5]अर्थात् आफ्नो दावीको लागि कुनै प्रमाण छ भने प्रस्तुत गर । परन्तु उनको पासमा प्रमाण कहाँ छ र ? त्यहाँ त केवल कल्पना तथा भ्रम छ ।

فَلَا تَشْهَدْ مَعَهُمْ ۚ وَلَا تَتَّبِعْ أَهْوَاءَ الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا وَالَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ وَهُم بِرَبِّهِمْ يَعْدِلُونَ ﴿١٥٠﴾

निषेध गरेको छ,[1] अनि यदि उनीहरू गवाही (साक्ष्य) दिन्छन् भने तपाईं तिनीहरूसँग साक्ष्य नदिनुस्।[2] तथा उनका जथाभावी विचारहरूको अनुसरण नगर्नुस् जसले हाम्रा आयतहरूलाई मिथ्या भने तथा जो परलोकप्रति विश्वास गर्दैन तथा (अन्यलाई) आफ्ना पोषक सरह मान्दछन्।[3]

قُلْ تَعَالَوْا أَتْلُ مَا حَرَّمَ رَبُّكُمْ عَلَيْكُمْ ۖ أَلَّا تُشْرِكُوا بِهِ شَيْئًا ۖ وَبِالْوَالِدَيْنِ إِحْسَانًا ۖ وَلَا تَقْتُلُوا

(१५१) भन्नुस् कि आउ म तिमीलाई पढेर सुनाउँछु कि तिमीलाई अल्लाहले के कुराबाट मनाही गरेको छ।[4] त्यो यो हो कि उसँग कुनै वस्तुको मिश्रण नगर।[5] तथा माता-पितासँग

---

[1]अर्थात् त्यो पशु जसलाई वर्जित गरिएको थियो।

[2]किनभने उनीहरूसित असत्य र मिथ्यारोपण बाहेक अरू केही छैन।

[3]अर्थात् त्यसको समान मानेर शिर्क बहुईश्वरवाद (मिश्रण) गर्दछन्।

[4]अर्थात् निषेध त्यो होइन जसलाई तिमीले बिना धार्मिक प्रमाण, मात्र आफ्नो मिथ्या सन्देह तथा शंकायुक्त विचारहरूको आधारमा अवैध बनाएका छौ। बरू अवैध त त्यो वस्तु हो जसलाई तिम्रो प्रभुले वर्जित गरेको छ, किनभने तिम्रो जन्मदाता त तिम्रो पालनकर्ता हो तथा प्रत्येक वस्तुको उसलाई नै ज्ञान छ। यसकारण उसैलाई यो अधिकार प्राप्त छ कि त्यो जुन कुरोलाई चाहन्छ हलाल (उचित) तथा जुन कुरोलाई चाहन्छ हराम (अनुचित) गर्दछ। अतः म तिमीलाई ती कुराहरूको विस्तृत जानकारी दिन्छु, जसको चेतावनी तिम्रो प्रभुले दिएको छ।

[5](لا تشركوا) भन्दा पूर्व (أوصاكم) यसमा नीहित छ। अर्थात् अल्लाह तआलाले तिमीलाई यस कुरोको आदेश दिएको छ कि उसँग कुनै वस्तुलाई साझेदार नबनाउ। शिर्क महापाप हो, जसको निम्ति क्षमा छैन, मुश्रिक (मिश्रणवादी) को लागि स्वर्ग निषेध तथा नरक निश्चित छ। कुर्आन मजीदमा सबै कुराहरूको विभिन्न रूपले पुनरावृत्ति भएको छ। तथा नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि यसको सविस्तार वर्णन गर्नुभएको छ, यसको उपरान्त वास्तविकता यो हो कि मानिसहरू शैतानको बहकाउमा आएर शिर्कको सामान्यरूपले कार्य गर्दछन्।

أَوْلَادَكُم مِّنْ إِمْلَاقٍ ۖ نَّحْنُ نَرْزُقُكُمْ وَإِيَّاهُمْ ۖ وَلَا تَقْرَبُوا الْفَوَاحِشَ مَا ظَهَرَ مِنْهَا وَمَا بَطَنَ ۖ وَلَا تَقْتُلُوا النَّفْسَ الَّتِي حَرَّمَ اللَّهُ إِلَّا بِالْحَقِّ ۚ ذَٰلِكُمْ وَصَّاكُم بِهِ لَعَلَّكُمْ تَعْقِلُونَ ﴿١٥١﴾

उपकार गर ।[1] तथा आफ्ना सन्तानलाई दरिद्रताका कारण हत्या नगर, हामी तिमीलाई तथा उनलाई जीविका प्रदान गर्दछौं ।[2] तथा प्रकट एवं लुकेको अश्लीलताको जीविका निकट नजाउ तथा त्यस प्राणलाई जसबाट अल्लाहले मनाही गरेको छ हत्या नगर, परन्तु यो अर्कै कुरा हो कि बैधानिक कारणले ।[3] गर्न परोस् । तिमीलाई उसले यसैको निर्देश दिएको छ, ताकि तिमी बुझ्न सक ।

وَلَا تَقْرَبُوا مَالَ الْيَتِيمِ إِلَّا بِالَّتِي هِيَ أَحْسَنُ حَتَّىٰ يَبْلُغَ أَشُدَّهُ ۖ

(१५२) तथा अनाथको मालको निकट नजाउ किन्तु अति उचित ढङ्गले यहाँसम्मकि त्यो युवा अवस्थामा पुगोस्,[4] तथा न्यायपूर्वक

---

[1]अल्लाह तआलाको एक हुने तथा त्यसका आदेशहरूको पालन गर्नुको उपरान्त यहाँपनि (तथा कुर्आनमा अन्य स्थानमा पनि) माता-पितासँग दया-भावको व्यवहार गर्ने आदेश दिएको छ, जसबाट यो स्पष्ट हुन्छ कि प्रभुका आदेशहरूको पालनाको उपरान्त माता-पिताका आदेशहरूको पालनाको ठूलो विशेषता छ । यदि कसैले यस उप-पालक (माता-पिताका आदेशहरूका पालन तथा उनीसँग दया भावको व्यवहार गर्नु) का आवश्यकताहरूलाई पूरा गरेन भने त्यो महापोषकका आदेशहरूको पालना पनि गर्न सक्दैन । अर्थात् त्यसमा असफल रहनेछ ।

[2]अज्ञानकालको यो अत्याधिक कुरूप कार्य आज पनि परिवार नियोजनका रूपमा विद्यमान छ तथा सम्पूर्ण संसारमा यसको प्रचार-प्रसारको कार्य भइराखेको छ । अल्लाह तआलाले यसबाट सुरक्षित राखून् ।

[3]अर्थात बदलाको रूपमा न केवल उचित छ, बरू यदि मृतकका सम्बन्धी क्षमा गर्दैनन् भने यो हत्या अति आवश्यक हुन पुग्छ ।

﴿وَلَكُمْ فِي الْقِصَاصِ حَيَاةٌ﴾

"प्रति हिंसामा तिम्रो जीवन छ ।" (सूरः अल-बक़रः-१७९)

[4]जुन अनाथको संरक्षण तिम्रो अधिकारमा आउँछ, त्यसको लागि राम्रो चिताउनु तिम्रो अनिवार्य कर्तव्य हो । यसको हितको लागि आवश्यक छ कि यदि उसको पासमा माल छ अर्थात् उत्तराधिकारमा उसलाई भाग प्राप्त भएछ चाहे नगद होस् अथवा जमीन-जायदादको रूपमा, यदि त्यसबेला त्यो त्यसलाई सुरक्षित राख्नमा सक्षम छैन भने उसको मालको त्यसबेलासम्म निःस्वार्थ भावले रक्षा गरियोस् जबसम्मकि त्यो तरूण अवस्थामा पुग्दैन ।

وَأَوْفُوا الْكَيْلَ وَالْمِيزَانَ بِالْقِسْطِ لَا نُكَلِّفُ نَفْسًا إِلَّا وُسْعَهَا وَإِذَا قُلْتُمْ فَاعْدِلُوا وَلَوْ كَانَ ذَا قُرْبَىٰ وَبِعَهْدِ اللَّهِ أَوْفُوا ذَٰلِكُمْ وَصَّاكُم بِهِ لَعَلَّكُمْ تَذَكَّرُونَ ﴿١٥٢﴾

माप एवं तौल पूरा गर,[1] हामी कसैमाथि त्यसको शक्तिभन्दा अधिक भार राख्दैनौं,[2] तथा जब कुरा भन्दछौ त न्याय गर यद्यपि त्यो निकट सम्बन्धी कै कुरा होस् तथा अल्लाहसित गरिएको वाचा पूरा गर, उसले तिमी सबैलाई यसैको आदेश दिएको छ ताकि तिमी स्मरण गर ।

وَأَنَّ هَٰذَا صِرَاطِي مُسْتَقِيمًا فَاتَّبِعُوهُ وَلَا تَتَّبِعُوا السُّبُلَ

(१५३) तथा यही मेरो सोझो बाटो,[3] हो, अतः त्यसैको आचरण गर ।[4] तथा अन्य पथहरूमा

यो नहोस् कि त्यो वयस्क हुनुभन्दा पूर्व त्यसको माल, जग्गा-जमीन तथा सम्पत्तिलाई टुङ्गो समाप्त पारियोस् ।

[1]माप-तौलमा कमी गर्नु, लिंदाखेरि पूरा माप-तौलसित लिनु, परन्तु दिंदाखेरि यस्तो नगर्नु, बरू डाँडी मारेर अरूहरूलाई कम दिनु, यो अत्याधिक नीच तथा असभ्य कुरो हो । आदरणीय शोएबको समुदायमा यही रोग थियो, जुन तिनीहरूको विनाशको कारण बन्यो ।

[2]यहाँ यस कुराको वर्णनको यो उद्देश्य हो कि जुन कुराहरूबाट हामी तिमीलाई सावधान गरिराखेका छौं, यो होइन कि यिनलाई कार्यन्वित नगरियोस् अथवा कठिन होस् । यदि यस्तो भएको भए हामीले यसको आदेश नै गर्दैनथ्यौं । यसकारण हामी कसैलाई उसको शक्तिभन्दा अधिक गर्नुको आदेश दिंदैनौं । यसकारण यदि आखिरतमा मोक्ष तथा संसारमा सम्मान चाहन्छौं भने अल्लाहका यी आदेशहरूका अनुसार कर्म गर तथा तिनीसँग आनाकानी नगर ।

[3]'यो' सित तात्पर्य कुर्‌आन मजीद हो अथवा इस्लाम धर्म अथवा ती आदेश जुन विशेषताले यस आयतमा वर्णन गरिएका छन् । तथा त्यो हो एकेश्वरवाद, मरणोपरान्तको परिणाम तथा रिसालत । तथा यी नै इस्लाम धर्मका तीन मुलधार हुन्, जसको धुरीमा सम्पूर्ण धार्मिक नियम घुम्दछन् । यसकारण यसको जे अर्थ लगाए पनि, भाव एउटै छ ।

[4]"सोझो मार्ग" लाई एक वचनको रूपमा वर्णन गरिएको छ, किनभने अल्लाहको अथवा कुर्‌आनको, तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको मार्ग एउटै छ । एकभन्दा अधिक होइन । यसकारण अनुकरण मात्र त्यसै एक मार्गको गर्नु छ । कुनै अन्यको होइन । यही इस्लामी समुदायको एकता तथा अखण्डताको आधारशिला हो जसबाट टाढिएर यो समुदाय विभिन्न गुटहरूमा विभाजित छ । यद्यपि यसको चेतावनी दिइएको थियो कि "अर्को मार्गमा न हिंड किनभने ती मार्ग तिमीलाई अल्लाहको मार्गबाट विचलित गराइदिनेछ ।" अन्य स्थानमा अल्लाह तआलाको आदेश छः

تَتَفَرَّقَ بِكُمْ عَنْ سَبِيلِهِۦ ذَٰلِكُمْ وَصَّىٰكُم بِهِۦ لَعَلَّكُمْ تَتَّقُونَ ﴿١٥٣﴾

नहिंड नत्र तिमीलाई त्यसको मार्गबाट विचलित गरिदिने छन्, उसले तिमीलाई यसैको आदेश दिएको छ ताकि तिमी सुरक्षित रह ।

ثُمَّ ءَاتَيْنَا مُوسَى ٱلْكِتَٰبَ تَمَامًا عَلَى ٱلَّذِىٓ أَحْسَنَ وَتَفْصِيلًا لِّكُلِّ شَىْءٍ وَهُدًى وَرَحْمَةً لَّعَلَّهُم بِلِقَآءِ رَبِّهِمْ يُؤْمِنُونَ ﴿١٥٤﴾

(१५४) अनि (हेर) हामीले मूसालाई (ईशदूत) किताब दिएका थियौं (धर्मलाई) पूर्णता प्रदान गर्नका निम्ति, जसलाई उसले उत्तम रीतिले ग्रहण गरेको थियो, र प्रत्येक कुरोलाई स्पष्टरूपले वर्णन गर्न मार्गदर्शन दिन तथा दया गर्नको लागि ताकि उनीहरूले आफ्ना पालनकर्तासित साक्षात्कार हुने कुरामा विश्वास गरून् ।

وَهَٰذَا كِتَٰبٌ أَنزَلْنَٰهُ مُبَارَكٌ فَٱتَّبِعُوهُ وَٱتَّقُوا۟ لَعَلَّكُمْ تُرْحَمُونَ ﴿١٥٥﴾

(१५५) तथा यो (पवित्र कुर्आन) एउटा शुभ-शास्त्र[२] हो जसलाई हामीले अवतरित गर्‍यौं । अत: तिमीले यसको

﴿ أَنْ أَقِيمُوا الدِّينَ وَلَا تَتَفَرَّقُوا فِيهِ ﴾

"धर्मलाई स्थापित गर तथा यसमा फुट नपार ।" (सूर: अश्शूरा-१३) अर्थात फूट तथा विभेदको आज्ञा छैन । यसै कुरोलाई नबी सल्लल्लाहु अलैहि वसल्लमले अत्यन्त स्पष्टरूपले हदीसमा वर्णन गर्नुभएको छ कि आफ्नो हातले एक सरल रेखा तान्नुभयो तथा भन्नुभयो कि "यो अल्लाहको सोझो मार्ग हो ।" तथा केही अन्य रेखाहरू त्यसको दाहिने तथा बायाँतिर तान्नुभयो तथा भन्नुभयो "यी त्यस्ता मार्ग हुन् जसमा शैतान बसेको छ तथा त्यो त्यतातिर मानिसहरूलाई बोलाउँछ ।" अनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यही आयत पढ्नुभयो जुन व्याख्याको लागि प्रस्तुत छ । (मुसनद अहमद भाग १, पृष्ठ ४६५, ४३५, अहमद शाकिरले यसलाई सहीह भन्नुभएको छ । (हेर्नुस् मुसनद अहमद बतालीक़ अहमद शाकिर संख्या ४१४२) बरू इब्ने माज़ाको कथनमा यसभन्दा अधिक स्पष्टीकरण हुन्छ कि उहाँले दायाँ-बायाँ दुई-दुईवटा रेखाहरू तान्नुभयो अर्थात् कुल चार रेखाहरू तान्नुभयो । तथा तिनलाई शैतानको मार्ग भन्नुभयो ।

[१]यो पवित्र कुरआनको आफ्नो शैली हो जसलाई कैयन् ठाउँहरूमा दोहोर्‍याइएको छ, कि जहाँ पवित्र कुर्आनको चर्चा हुन्छ त्यहाँ (तौरात) को तथा जहाँ तौरातको चर्चा हुन्छ त्यहाँ पवित्र कुर्आनको पनि चर्चा गरिन्छ । यसका अनेक उदाहरण हाफिज़ इब्ने कसीरले प्रस्तुत गर्नुभएको छ, यहाँ यसै शैलीका अनुसार तौरात तथा त्यसको यस गुणको वर्णन छ कि त्यो पनि आफ्नो युगमा एक परिपूर्ण धर्मग्रन्थ थियो, जसमा तिनको धर्मका सबै आवश्यक कुराहरू सविस्तार वर्णित थिए, तथा मार्गदर्शन एवं दयाका स्रोत थिए ।

[२]यसबाट तात्पर्य पवित्र कुर्आन हो जसमा लोक-परलोकका शुभ तथा लाभ सीमित छन् ।

अनुसरण गर ताकि तिमीमाथि दया गरियोस् ।

(१५६) ताकि यो नभन[1] कि हामीभन्दा पूर्व दुई समुदायहरूमाथि धर्मशास्त्र (तौरात तथा इंजील) अवतरित गरियो तथा हामी तिनका अध्ययनबाट अनभिज्ञ रहयौं ।[2]

أَن تَقُولُوٓا۟ إِنَّمَآ أُنزِلَ ٱلْكِتَٰبُ عَلَىٰ طَآئِفَتَيْنِ مِن قَبْلِنَا وَإِن كُنَّا عَن دِرَاسَتِهِمْ لَغَٰفِلِينَ ١٥٦

(१५७) अथवा तिमी यो नभन कि यदि हामीमाथि धर्मशास्त्र अवतरित भएको भए हामी उनीभन्दा अधिक सत्यमार्गमा हुन्थ्यौं, तसर्थ तिम्रो पासमा तिम्रो पोषकको तर्फबाट स्पष्ट तर्क एवं मार्गदर्शन तथा दया आइसकेको छ,[3] अनि त्यसभन्दा अधिक पापी को होला जसले अल्लाहका आयतहरूलाई मिथ्या भन्यो तथा तिनीबाट विमुख भयो,[4] हामीले घोर यातना आफ्ना आयतहरूबाट विमुख हुनुको कारण उनलाई दिनेछौं जो विमुख गरिराखेका छन् ।

أَوْ تَقُولُوا۟ لَوْ أَنَّآ أُنزِلَ عَلَيْنَا ٱلْكِتَٰبُ لَكُنَّآ أَهْدَىٰ مِنْهُمْ ۚ فَقَدْ جَآءَكُم بَيِّنَةٌ مِّن رَّبِّكُمْ وَهُدًى وَرَحْمَةٌ ۚ فَمَنْ أَظْلَمُ مِمَّن كَذَّبَ بِـَٔايَٰتِ ٱللَّهِ وَصَدَفَ عَنْهَا ۗ سَنَجْزِى ٱلَّذِينَ يَصْدِفُونَ عَنْ ءَايَٰتِنَا سُوٓءَ ٱلْعَذَابِ بِمَا كَانُوا۟ يَصْدِفُونَ ١٥٧

(१५८) उनी फरिश्ताहरूको आगमनको प्रतीक्षा गरिराखेका छन् अथवा आफ्नो स्वामी (अल्लाह) को आगमनको अथवा तपाईंको पालनकर्ताका केही

هَلْ يَنظُرُونَ إِلَّآ أَن تَأْتِيَهُمُ ٱلْمَلَٰٓئِكَةُ أَوْ يَأْتِىَ رَبُّكَ أَوْ يَأْتِىَ

[1]अर्थात् यो कुरआन यसकारण अवतरित गरियो ताकि तिमी यो नभन । दुई सम्प्रदायहरूसित तात्पर्य यहूदी तथा इसाई हुन् ।

[2]यसकारण कि त्यो हाम्रो भाषामा थिएन । अत: यस बहानालाई समाप्त गर्नको लागि कुरआन अरबी भाषामा अवतरित गऱ्यो ।

[3]अर्थात् यो बहाना पनि तिमी बनाउन सक्दैनौ ।

[4]अर्थात् मार्गदर्शक तथा कृपा फल धर्मशास्त्र अवतरित भए पश्चात अब जो व्यक्ति मार्गदर्शन (इस्लाम) को मार्ग अपनाएर अल्लाहको कृपाको पात्र बन्दैन बरू झुठ्लाउनु तथा विमुखतालाई अपनाउँछ, त त्यसभन्दा ठूलो अत्याचारी को छ र ? (सदफ़) को अर्थ विमुख हुनु तथा "अरूलाई रोक्नु" पनि गरिएको छ ।

بَعْضُ اٰيٰتِ رَبِّكَ ۭ يَوْمَ يَاْتِيْ بَعْضُ اٰيٰتِ رَبِّكَ لَا يَنْفَعُ نَفْسًا اِيْمَانُهَا لَمْ تَكُنْ اٰمَنَتْ مِنْ قَبْلُ اَوْ كَسَبَتْ فِيْٓ اِيْمَانِهَا خَيْرًا ۭ قُلِ انْتَظِرُوْٓا

निशानी (लक्षण) आउने कुरा को ?[1] जुन दिन तिम्रो पोषकको तर्फबाट चिन्ह आउनेछन्, कुनै प्राणीलाई त्यसको विश्वास काम लाग्ने छैन जसले त्यसभन्दा पूर्व विश्वास गरेको हुँदैन[2] अथवा आफ्नो विश्वासमा कुनै शुभ कर्म गरेको हुँदैन,[3]

[1]कुर्‌आन मजीदलाई अवतरित गरेर तथा परम आदरणीय मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको रिसालत (दूतत्व) द्वारा तर्क प्रमाणित गरिसकेको छ । परन्तु अहिले पनि यी कुमार्गबाट रोकिन्नन् भने के यिनीहरू यस कुराको प्रतीक्षामा छन् कि उनको पासमा प्रलय होस् तथा यिनी अल्लाहका समक्ष प्रस्तुत गरियून् । अनि त्यस बखत ईमान ल्याउने छन् । अथवा तपाईंको प्रभुको ठूलो निशानी आओस् । जस्तै प्रलयको निकट सूर्यको पूर्वको सट्टा पश्चिमबाट उदय हुनु । अनि यसप्रकारको ठूलो निशानी देखेर विश्वास गर्नेछन् ? आउँदो वाक्यमा यसलाई स्पष्ट गरिँदैछ कि यदि उनी यसप्रकारको प्रतीक्षामा छन् भने निकै ठूलो मूर्खताको प्रदर्शन गरिराखेका छन् । किनभने ठूलो लक्षण प्रकट भइसके पश्चात अनिष्ठको निष्ठा तथा कुकर्मी एवं अत्याचारीको क्षमा-याचना स्वीकार हुनेछैन । सहीह हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "प्रलय हुनेछैन, जबसम्म कि सूर्य (पूर्वको विपरीत) पश्चिमबाट उदय हुँदैन, अनि जब यस्तो हुनेछ तथा मानिसहरूले त्यसलाई पश्चिमबाट उदय भइराखेको देख्नेछन्, त सबैले विश्वास गर्नेछन् ।"अनि नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले यो आयत पढ्नुभयो ।

﴿لَا يَنْفَعُ نَفْسًا اِيْمَانُهَا لَمْ تَكُنْ اٰمَنَتْ مِنْ قَبْلُ﴾

"त्यसबेला विश्वास गर्नु (ईमान ल्याउनु) कसैलाई लाभकारी हुनेछैन, जो यसभन्दा पूर्व विश्वास गरेको हुनेछैन ।" (सहीह बुख़ारी तफ़सीर अल-अनाम)

[2]अर्थात् क़ाफिरहरूको ईमान न लाभकारी हुनेछ न स्वीकार हुनेछ ।

[3]यसको अर्थ यो हो कि यदि कोही पापी निष्ठावान आफ्ना पापहरूको क्षमा-याचना गर्छ भने, त्यसको याचना स्वीकार हुनेछैन तथा त्यसको पश्चात पुण्य कार्य अस्वीकार हुनेछ, जस्तो कि हदीसबाट पनि यसको पुष्टि हुन्छ ।

إِنَّا مُنتَظِرُونَ ﴿١٥٨﴾

तपाईं भन्नुस् कि तिमी प्रतीक्षा गर हामीले (पनि) प्रतीक्षा गरिराख्ने छौं ।[1]

إِنَّ الَّذِينَ فَرَّقُوا دِينَهُمْ وَكَانُوا شِيَعًا لَّسْتَ مِنْهُمْ فِي شَيْءٍ ۚ إِنَّمَا أَمْرُهُمْ إِلَى اللَّهِ ثُمَّ يُنَبِّئُهُم بِمَا كَانُوا يَفْعَلُونَ ﴿١٥٩﴾

(१५९) निःसन्देह जसले आफ्नो धर्म विभाजित गरिदिए तथा अनेक धार्मिक सम्प्रदाय बने[2] तपाईंको उनीसित कुनै सम्बन्ध छैन, उनको निर्णय अल्लाहनिर छ अनि उनीहरूलाई त्यसबाट सूचित गर्नेछ जुन उनीहरूले गर्दै आइराखेका छन् ।

مَن جَاءَ بِالْحَسَنَةِ فَلَهُ عَشْرُ أَمْثَالِهَا ۖ وَمَن جَاءَ بِالسَّيِّئَةِ فَلَا يُجْزَىٰ إِلَّا مِثْلَهَا وَهُمْ لَا يُظْلَمُونَ ﴿١٦٠﴾

(१६०) जो व्यक्ति पुण्य कार्य गर्नेछ त्यसलाई त्यसको दसगुना प्राप्त हुनेछ ।[3] तथा जसले कुकर्म गर्नेछ त्यसलाई त्यस समानको दण्ड दिइनेछ ।[4] तथा उनीहरूमाथि अत्याचार हुनेछैन ।

---

[1]यो विश्वास नगर्ने तथा याचना नगर्नेहरूलाई चेतावनी हो तथा सावधान गरिंदैछ । कुरआन करीममा यही विषय सूरः मुहम्मद-१८ तथा सूरः मोमिन-८४ तथा ८५ मा गरिएको छ ।

[2]यसबाट केही जानकारहरूले यहूदी तथा इसाई तात्पर्य लिन्छन्, जो विभिन्न गुटहरूमा विभाजित थिए । केहीले मूर्तिपूजकहरूलाई लिन्छन् जसमा केहीले फरिश्ताहरूको, केहीले ताराहरूको, केहीले विभिन्न मूर्तिहरूको पूजा गर्दथे । परन्तु यो विषय सामान्य छ जसमा काफ़िर तथा मूर्तिपूजकहरूसहित ती सबै सम्मिलित छन् जो अल्लाहको धर्म तथा रसूल सल्लल्लाहु अलैहि वसल्लमको मार्गलाई छाडेर अर्को धर्म अपनाएर अन्य मार्गको अवलम्बन गरी भेंद तथा फूटको मार्ग अपनाउँछन् । (شيعا) को अर्थ हो गुट तथा गिरोह तथा यो कुरा ती सबै समुदायहरूलाई सत्य हुन्छ जो धर्मको विषयमा एकमत थिए, परन्तु पछि तिनका विभिन्न मानिसहरूले आफ्ना कुनै ठूला-बडाका विचारलाई अन्तिम शब्द सिद्ध गरेर आफ्ना मार्ग पृथक गरे, चाहे त्यो मार्ग सत्य तथा पुण्यविहीन नै किन नहोस् । (फ़तहुल क़दीर)

[3]यो अल्लाह तआलाको कृपा तथा उपकारको वर्णन हो, जुन त्यसले निष्ठावानहरूसँग गर्नेछ कि एक पुण्यको बदला दश पुण्यको समान प्रदान गर्नेछ । यो कमसेकम परिणाम हो, बरू कुरआन तथा हदीस दुबैबाट सिद्ध छ कि यही पुण्यहरूको प्रतिफल कैयौं सय गुना, बरू हजारौं तथा लाखौं गुना सम्म हुनेछ ।

[4]अर्थात् जुन पापहरूको दण्ड निर्धारित छैन, तथा त्यो गरे पश्चात त्यसबाट क्षमा पनि माँगेर अथवा उसको पुण्य उसका पापहरूभन्दा अधिक नहोस्, अथवा

(१६१) (तपाईं) भनिदिनुस् कि मलाई मेरो प्रभुले एउटा सोझो मार्ग देखाइसकेको छ जुन शाश्वत धर्म हो इब्राहीमको (जो अल्लाहबाहेक अन्यबाट वियोगी थिए) तथा उनी मिश्रणवादीहरू मध्येका थिएनन् ।

قُلْ إِنَّنِي هَدَانِي رَبِّي إِلَى صِرَاطٍ مُّسْتَقِيمٍ دِينًا قِيَمًا مِّلَّةَ إِبْرَاهِيمَ حَنِيفًا ۚ وَمَا كَانَ مِنَ الْمُشْرِكِينَ ﴿١٦١﴾

(१६२) (तपाईं) भनिदिनुस् कि निःसन्देह मेरो नमाज़, तथा मेरो समस्त आराधना तथा समस्त जीवन तथा मृत्यु सर्वलोकका पोषक अल्लाहकै लागि हो ।

قُلْ إِنَّ صَلَاتِي وَنُسُكِي وَمَحْيَايَ وَمَمَاتِي لِلَّهِ رَبِّ الْعَالَمِينَ ﴿١٦٢﴾

(१६३) त्यसको कोही साक्षी छैन मलाई यसैको आदेश दिइएको छ तथा म प्रथम हुँ जसले उसप्रति आत्मसमर्पण गऱ्यो ।[1]

لَا شَرِيكَ لَهُ ۖ وَبِذَٰلِكَ أُمِرْتُ وَأَنَا أَوَّلُ الْمُسْلِمِينَ ﴿١٦٣﴾

---

अल्लाह तआलाले आफ्नो विशेष कृपाले त्यसलाई क्षमा नगरेको होस् (किनभने यी सबै अवस्थामा सांकेतिक दण्डको परिधिमा आउने छैन) अनि अल्लाह तआलाले यस्तो नराम्रो कुरोको दण्ड दिनेछ, तथा उसको समान नै दिनेछ ।

[1]यस अद्वैतको आमन्त्रण सबै ईशदूतले दिए । जस्तो यहाँ अन्तिम ईशदूत (नराशंस) को मुखारबिन्दुबाट भन्न लगाइयो कि मलाई यसैको आदेश दिइएको छ र म सर्वप्रथम यसलाई मान्दछु । अन्य स्थानमा अल्लाहले आदेश गऱ्यो कि हामीले तपाईंभन्दा पूर्व जतिपनि अम्बिया (ईशदूत) पठायौं, उनीहरूलाई यही आदेश दियौं कि म बाहेक कोही पूज्य छैन । अतः मेरो नै आराधना गर । (अल-अम्बिया-२५) यसैप्रकार ईशदूत नूहले पनि यही घोषणा गरे ।

﴿وَأُمِرْتُ أَنْ أَكُونَ مِنَ الْمُسْلِمِينَ﴾

"मलाई यो आदेश दिइएको छ कि अल्लाहप्रति आत्मसमर्पणकारीहरूमध्ये प्रथम बनूँ ।" (सूरः यूनुस-७२)

आदरणीय इब्राहीमको विषयमा भनिएको छ कि जब अल्लाहले उनीसित भन्यो कि स्वयंलाई म प्रति समर्पित गर त उनले भने कि मैले विश्व विधाताप्रति आत्म समर्पण गरे । (सूरः बकरः-१३१) आदरणीय इब्राहीम तथा याकूबले आफ्ना पुत्रहरूलाई यही अन्तिम आदेश दिए कि तिम्रो अन्त इस्लाम धर्ममा हुनुपर्छ । आदरणीय यूसुफले प्रार्थना गरेः

﴿تَوَفَّنِي مُسْلِمًا﴾

"मलाई इस्लामको स्थितिमा संसारबाट उठाउनु ।" (सूरः यूसुफ-१०१)

قُلْ أَغَيْرَ اللّٰهِ أَبْغِي رَبًّا وَهُوَ رَبُّ كُلِّ شَيْءٍ وَلَا تَكْسِبُ كُلُّ نَفْسٍ إِلَّا عَلَيْهَا وَلَا تَزِرُ وَازِرَةٌ وِزْرَ أُخْرَىٰ ثُمَّ إِلَىٰ رَبِّكُمْ مَرْجِعُكُمْ فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ فِيهِ تَخْتَلِفُونَ ﴿١٦٤﴾

(१६४) तपाईं भन्नुस् कि के म अल्लाहबाहेक अरू कसैलाई स्वामीको रूपमा खोज गरूँ जबकि त्यही सबैको स्वामी हो,[1] ? तथा कुनै प्राणीले जे-जति अर्जन गर्छ उसैको लागि हुनेछ कोही अन्य कसैको बोझ उठाउन सक्ने छैन,[2] अनि तिमीलाई तिम्रो पोषकतिर पुन: जानुछ त्यसले तिम्रा मतभेदहरूको विषयमा तिमीलाई भन्नेछ ।[3]

وَهُوَ الَّذِي جَعَلَكُمْ خَلَائِفَ الْأَرْضِ وَرَفَعَ بَعْضَكُمْ فَوْقَ بَعْضٍ دَرَجَاتٍ

(१६५) तथा उसैले तिमीलाई धर्तीमा उत्तराधिकारी[4] बनायो, तथा तिमीमध्येबाट केहीका पदहरूलाई

आदरणीय मूसाले आफ्ना समुदायसित भने :

﴿فَعَلَيْهِ تَوَكَّلُوا إِنْ كُنْتُمْ مُسْلِمِينَ﴾

"यदि तिमी मुसलमान हौ भने त्यसै अल्लाहमा भरोसा गर ।" (सूर: यूनुस-८४) आदरणीय ईसाले आफ्ना साथीहरूसित सूर: अल-मायद १११ मा भन्नुभयो ﴿وَاشْهَدْ بِأَنَّنَا مُسْلِمُونَ﴾ यसैप्रकार अन्य नबीहरूले पनि तथा उनका सदभावक अनुयायीहरूले पनि त्यसै इस्लामको अनुकरण गरे जसमा एक अल्लाहको उपासनाको मूलधार स्थिति प्राप्त छ यद्यपि कि ती धार्मिक नियम एक-अर्काभन्दा भिन्न थिए ।

[1]यहाँ पोषकसित तात्पर्य पूज्य बनाउनु हो जसको मूर्तिपूजक इन्कार गर्दै आइराखेका छन्, तथा जुन त्यसको पोषक हुनुको माँग हो । परन्तु मूर्तिपूजक त्यसको पोषक हुने कुरोलाई त मान्दथे तथा त्यसमा कसैलाई पनि साझेदार ठहराउँदैनथे, परन्तु पूजित हुने कुरो साझेदार ठहराउँथे ।

[2]अर्थात् अल्लाह तआ़लाले न्यायको पूर्ण प्रबन्ध गर्नेछ तथा जसले राम्रो-नराम्रो जस्तो कर्म गरेको होला, त्यसलाई त्यसै अनुसारको सम्मान तथा दण्ड दिनेछ तथा एकको बोझ अर्कोमाथि राख्ने छैन ।

[3]अत: यदि तिमी यस अद्वैतलाई मान्दैनौं जो सबै ईशदूतहरूको एकमात्र शिक्षा रहेको छ त तिमी आफ्नो कर्म गर र हामी अफ्नो काम गरिराखेका छौं । प्रलय पश्चात अल्लाहको सदनमा हाम्रो तिम्रो बीच निर्णय हुनेछ ।

[4]अर्थात् अधिकारी बनाएर अधिकारहरूसित अलंकृत गऱ्यो अथवा एकपछि अर्कोलाई उत्तराधिकारी बनायो ।

لِّيَبْلُوَكُمْ فِي مَآ ءَاتَىٰكُمْ ۗ إِنَّ رَبَّكَ سَرِيعُ ٱلْعِقَابِ وَإِنَّهُۥ لَغَفُورٌ رَّحِيمٌۢ ١٦٥

केहीको अपेक्षा उच्च राख्यो, ताकि जे-जति उसले दिएको छ त्यसमा तिम्रो परीक्षा लिइयोस् ।[1] निःसन्देह तिम्रो स्वामी शीघ्र यातना दिनेछ तथा वस्तुतः त्यो क्षमाशील दयानिधि छ ।

## सूरतुल अअ्राफ-७

سُورَةُ الأَعْرَافِ

सूरः अल-आराफ मक्कामा उतारिएको तथा यसका दुई सय आयतहरू तथा चौबीस रूकूअ छन् ।

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्याधिक कृपालु तथा अति दयालु छ ।

الٓمٓصٓ ١

(१) अलिफ. लाम. मीम. स्वाद ।

كِتَٰبٌ أُنزِلَ إِلَيْكَ فَلَا يَكُن فِي صَدْرِكَ حَرَجٌ مِّنْهُ لِتُنذِرَ بِهِۦ وَذِكْرَىٰ لِلْمُؤْمِنِينَ ٢

(२) एउटा धर्मशास्त्र तपाईंतिर अवतरित गरियो ताकि यसद्वारा सावधान गर्नाले तपाईंको हृदयमा संकीर्णता उत्पन्न नहोस्[2] तथा निष्ठावानहरूका लागि शिक्षा हो ।

ٱتَّبِعُوا۟ مَآ أُنزِلَ إِلَيْكُم مِّن رَّبِّكُمْ

(३) जुन (धर्म विधान) तपाईंको पोषकतिरबाट अवतरित गरियो[3] त्यसको अनुसरण गर तथा

[1]अर्थात् दरिद्रता, धन, ज्ञान, अज्ञानता तथा स्वास्थ्य एवं रोग जसलाई जे-जति प्रदान गरिएको छ त्यसै मध्येबाट त्यसको उत्तराधिकारी बनायो ।

[2]अर्थात यसको प्रचारले तपाईंको मन संकुचित नहोस् कि कहीं नास्तिक म माथि मिथ्यारोपण नगरून तथा मलाई कष्ट नपुऱ्याउन् । यसकारण कि अल्लाह तपाईंको रक्षक तथा सहायक छ । अथवा (حرج) (हरजुन्) शंकाको अर्थमा छ अर्थात यो अल्लाहतिरबाट अवतरित हुने कुरोमा तपाईंको मनमा दुविधा हुनु हुँदैन । यो अन्योक्ति हो तथा वास्तवमा तपाईंका अनुयायीहरूलाई सम्बोधित गरिएको छ कि सन्देह नगरून् ।

[3]जुन अल्लाहतिरबाट अवतरित गरिएको छ अर्थात पवित्र कुर्आन एवं जुन अन्तिम ईशदूतको कथन हो अर्थात् (हदीस) किनभने तपाईंले भन्नुभयो कि म पवित्र ईशवाणी कुर्आन एवं त्यसको समान दिइएको हुँ, यी दुबैको अनुसरण अनिवार्य छ । यिनीहरू बाहेक कुनै अन्यको अनुसरण अनिवार्य छैन बरू तिनको इन्कार अनिवार्य छ जस्तो कि आगामी वाक्यमा भनियो कि अल्लाहलाई छाडि अन्य

وَلَا تَتَّبِعُوا مِن دُونِهِۦٓ أَوْلِيَآءَ ۗ قَلِيلًا مَّا تَذَكَّرُونَ ③

त्यसबाहेक अन्य सहायककहरूको अनुसरण नगर तिमीहरू निकै कम शिक्षा ग्रहण गर्दछौ ।

وَكَم مِّن قَرْيَةٍ أَهْلَكْنَٰهَا فَجَآءَهَا بَأْسُنَا بَيَٰتًا أَوْ هُمْ قَآئِلُونَ ④

(४) तथा कैयन् वस्तीहरूलाई हामीले नष्ट गरिदियौं तथा तिनीमाथि हाम्रो प्रकोप रात्रिको समयमा पुग्यो अथवा यस्तो अवस्थामा जबकि उनीहरू मध्यान्हको समयमा विश्राम गरिराखेका थिए ।[1]

فَمَا كَانَ دَعْوَىٰهُمْ إِذْ جَآءَهُم بَأْسُنَآ إِلَّآ أَن قَالُوٓا۟ إِنَّا كُنَّا ظَٰلِمِينَ ⑤

(५) तसर्थ जब उनीमाथि हाम्रो प्रकोप आयो त उनीहरू भन्नथाले कि हामी नै अत्याचारी (पापी) रहेका छौं ।[2]

فَلَنَسْـَٔلَنَّ ٱلَّذِينَ أُرْسِلَ إِلَيْهِمْ وَلَنَسْـَٔلَنَّ ٱلْمُرْسَلِينَ ⑥

(६) अत: हामी उनीहरूसित अवश्य सोध्नेछौं जसको पासमा उपदेश पठाइयो तथा हामी उपदेशकहरूसित पनि अवश्य सोध्नेछौं ।[3]

---

कसैको अनुसरण नगर जुनप्रकार मूर्खताकालमा प्रमुख एवं ज्योतिषिहरूको कुरोलाई महत्व दिइन्थ्यो यहाँसम्मकि वैध-अवैधको विषयमा तिनैको कुरा मानिन्थ्यो ।

[1] (قيلولة) शब्द "मध्यान्हको समय भोजन पश्चात विश्राम गर्नुलाई भन्दछन् ।" अर्थ यो हो कि हाम्रो प्रकोप एक्कासि यस्तो समयमा आयो जब उनीहरू निश्चित रूपले आफ्ना विस्तरहरूमा (ओछ्यानमा) विश्राम गरिराखेका थिए ।

[2]परन्तु प्रकोप आइहाले पश्चात यस्ता स्वीकारको कुनै लाभ छैन, जस्तो कि अघि स्पष्ट गरिसकिएको छ ।

﴿ فَلَمْ يَكُ يَنفَعُهُمْ إِيمَٰنُهُمْ لَمَّا رَأَوْا۟ بَأْسَنَا ۖ ﴾

"जब उनीहरूले हाम्रो प्रकोप देखिसके त त्यस समय उनको ईमान ल्याउने कुरो उनको लागि लाभकारी भएन ।" (सूर: अल-मोमिन-८५)

[3]समुदायहरूसित यो सोधिने छ कि के तिम्रो पासमा पैग़म्बर (सन्देशवाहक) आएका थिए ? उनीहरूले हाम्रा सन्देश पठाएका थिए ? त्यहाँ तिनीहरू उत्तर दिनेछन्, "हो, हे अल्लाह ! तिम्रा पैग़म्बर त अवश्य हाम्रो पासमा आएका थिए परन्तु हाम्रै दूर्भाग्य थियो कि हामीले उनको चिन्ता गरेनौं ।" तथा

فَلَنَقُصَّنَّ عَلَيْهِمْ بِعِلْمٍ وَمَا كُنَّا غَآئِبِينَ ⑦

(७) अनि हामीले पूरा ज्ञानका साथ तिनका समक्ष वर्णन गरिदिनेछौं[1] एवं हामी अनभिज्ञ थिएनौं ।

وَالْوَزْنُ يَوْمَئِذٍ الْحَقُّ فَمَنْ ثَقُلَتْ مَوَازِينُهُ فَأُولَٰٓئِكَ هُمُ الْمُفْلِحُونَ ⑧

(८) तथा त्यस दिन सत्य तुलना हुनेछ अनि जसको पलरा गह्रुङ्गो हुनेछ, ती नै सफल हुनेछन् ।

وَمَنْ خَفَّتْ مَوَازِينُهُ فَأُولَٰٓئِكَ الَّذِينَ خَسِرُوٓا أَنْفُسَهُمْ بِمَا كَانُوا بِآيَاتِنَا يَظْلِمُونَ ⑨

(९) तथा जसको पलरा हलुङ्गो हुनेछ, त यिनै ती मानिसहरू हुनेछन् जसले आफ्नो हानि गरिहाले यसकारण कि हाम्रा निशानीहरूको हनन गरिरहन्थे ।[2]

पैग़म्बरहरूसित सोधिने छ कि तिमीले हाम्रो सन्देश आफ्नो समुदायलाई पुऱ्याइदियौ तथा उनीहरूले त्यसको तुलनामा के कर्म गरे ? पैग़म्बर यस प्रश्नको उत्तर दिनेछन् जसको विस्तृत वर्णन पवित्र कुर्‌आनमा विभिन्न स्थानहरूमा विद्यमान छन् ।

[1]हामी सबै प्रत्यक्ष एवं परोक्षको ज्ञान राख्दछौं । अतः हामी दुबै (वर्ग एवं सन्देशवाहकहरू) का सामु सबै कुराहरू गरिदिनेछौं, तथा उनीहरूले जे-जति गरेका होलान् उनको अगाडि प्रस्तुत गरिदिनेछौं ।

[2]यी आयतहरूमा कर्महरूको तौल गर्ने सम्बन्धमा वर्णन छ, जुन प्रलयको दिन हुनेछ, जसलाई पवित्र कुर्‌आनमा विभिन्न स्थानहरूमा तथा हदीसहरूमा वर्णन गरिएको छ । जसको अर्थ यो हो कि तराजूमा कर्म तौलिने छन्, जसको पुण्यको पलरा गह्रुङ्गो हुनेछ त्यो सफल तथा जसका नराम्रो कुराहरूको पलरा गह्रुङ्गो हुनेछ त्यो असफल हुनेछ । यी कर्म कुन प्रकारले जोखिने छन् जबकि वास्तवमा यिनको भौतिक स्वरूप छैन ? यसमा एक विचार यो छ कि प्रलयका दिन अल्लाह तआला स्वय कर्म-कर्ताहरूलाई भौतिक स्वरूपमा वदलिदिनेछ तथा उनको तौल हुनेछ । दोस्रो विचार यो हो कि कर्मपत्र जोखिने छ जसमा यी कर्म लेखिएका हुनेछन् । तेस्रो विचार यो छ कि यी कर्महरूका कर्तालाई जोखिने छ । तीनैवटा विचारवालाहरूको पासमा आफ्ना विचारका पक्षमा सहीह हदीस तथा कथन उपलब्ध छ, यसकारण इमाम इब्ने क़सीर भन्नुहुन्छ कि तीनैवटा विचार उचित छन्, सम्भव छ कि कहिले कर्म, कहिले कर्मपत्र तथा कहिले स्वयं कर्मको कर्तालाई जोखिने छ (तर्कको लागि हेर्नुस् तफ़सीर इब्ने क़सीर) तुला तथा कर्महरूको तौलको विषय कुर्‌आन तथा हदीसवाट तर्कसंगत छ । यसको इन्कार अथवा कष्ट-कल्पना विचलन हो, तथा वर्तमान युगमा हामीले अब त भार नभएको वस्तु जसलाई हामी ठान्थ्यौ तथा यस्तो विचार थियो कि यिनको भार निकाल्न सकिन्न त्यस्ता कुराको पनि भार ज्ञात गर्नुको विधि तथा साधन उपलब्ध छन्, त अल्लाह तआलाको निम्ति कर्महरूलाई जोख्नु कदापि असम्भव छैन किनभने त्यसलाई हरेक प्रकारको सामर्थ्य छ ।

وَلَقَدْ مَكَّنّٰكُمْ فِى الْاَرْضِ وَ جَعَلْنَا لَكُمْ فِيْهَا مَعَايِشَ ؕ قَلِيْلًا مَّا تَشْكُرُوْنَ ﴿١٠﴾

(१०) तथा हामीले तिमीलाई पृथ्वीमा अधिकारसहित स्थान दियौं तथा त्यसमा तिम्रो लागि जीवन सामग्री बनायौं, तिमी अति अल्प कृतज्ञ हौ ।

وَلَقَدْ خَلَقْنٰكُمْ ثُمَّ صَوَّرْنٰكُمْ ثُمَّ قُلْنَا لِلْمَلٰٓئِكَةِ اسْجُدُوْا لِاٰدَمَ ۖ فَسَجَدُوْٓا اِلَّآ اِبْلِيْسَ ؕ لَمْ يَكُنْ مِّنَ السّٰجِدِيْنَ ﴿١١﴾

(११) तथा हामीले तिमीलाई पैदा गर्‍यौं अनि तिम्रो रूप बनायौं[1] त्यसपछि फरिश्ताहरूसित भन्यो कि आदमलाई ढोग गर तब इब्लीस बाहेक सबैले सजदा (ढोग) गरे त्यो (इब्लीस) सजदा गर्नेहरूमा सम्मिलित भएन ।

قَالَ مَا مَنَعَكَ اَلَّا تَسْجُدَ اِذْ اَمَرْتُكَ ؕ قَالَ اَنَا خَيْرٌ مِّنْهُ ۚ خَلَقْتَنِىْ مِنْ نَّارٍ وَّخَلَقْتَهٗ مِنْ طِيْنٍ ﴿١٢﴾

(१२) (अल्लाहले) भन्यो कि जब मैले तिमीलाई ढोग्न आदेश दिएँ त कुन कुराले तिमीलाई ढोग्नाबाट रोकिदियो,[2] उसले भन्यो म यसभन्दा उत्तम छु, तिमीले मलाई अग्निबाट उत्पन्न गर्‍यौ तथा यसलाई माटोबाट गरेका छौं ।[3]

---

[1](خلقناكم) को अर्थ हो तिमी सबैलाई पैदा गर्‍यो । यसमा तिमी सबै सर्वनाम यद्यपि बुहवचन हो किन्तु यसबाट तात्पर्य आदरणीय आदम हुन् ।

[2](ألا تسجد) मा (لا) अधिक छ अर्थात् (أن تسجد) (तिमीलाई ढोक्नबाट कसले रोक्यो ?) अथवा यहाँ वाक्यको लोप छ अर्थात् "तिमीलाई कुन विषयले वाध्य गर्‍यो कि सजदा नगर ।" (इब्ने कसीर तथा फ़तहुल कदीर) शैतान फरिश्ताहरू मध्ये थिएन, वरू कुरआनको स्वयं स्पष्टीकरणको अनुसार त्यो जिन्नात थियो । (सूर: अल कहफ-५०) परन्तु आकाशमा फरिश्ताहरूसँग रहनुको कारण त्यो सजदाको आदेशको पालन गर्नको लागि बाध्य थियो, जुन अल्लाहले फरिश्ताहरूलाई दिएको थियो । यसैकारण त्यससँग सोधियो पनि तथा त्यसमाथि प्रकोप पनि भयो । यदि त्यो आदेशमा सम्मिलित नै नभएको भए उससित सोधिन्नथ्यो तथा त्यो धिक्कृत हुने थिएन ।

[3]शैतानको यो क्षमा-याचना त्यसको पापभन्दा पनि गम्भीर पाप बन्यो । एक त त्यसको यो सोचाइ कि श्रेष्ठलाई आफूभन्दा मुनिको आदर तथा सम्मानको आदेश दिन सकिदैन, गलत छ । यसकारण कि मूल विषय अल्लाहको आदेश हो, त्यसको आदेशको अगाडि श्रेष्ठ अथवा निम्नको कुरा गर्नु अल्लाहको आदेशको अवहेलना हो । दोस्रो कुरो उसले आफू श्रेष्ठ हुनुको तर्क यो दियो कि म अग्निबाट हूँ तथा यो माटोबाट । परन्तु त्यसले त्यस श्रेष्ठतालाई अन्देखि (बेवास्ता) गरिदियो जुन आदरणीय आदमलाई प्राप्त भयो अर्थात अल्लाह तआलाले स्वयं आफ्नै हातले बनायो तथा आफूतिरैबाट फुँक्यो । यस श्रेष्ठता समान संसारको

قَالَ فَاهْبِطْ مِنْهَا فَمَا يَكُونُ لَكَ أَنْ تَتَكَبَّرَ فِيهَا فَاخْرُجْ إِنَّكَ مِنَ الصَّاغِرِينَ ⑬

(१३) (अल्लाह तआलाले) आदेश दियो कि तिमी आकाश[1] बाट झर तिमीलाई कुनै अधिकार छैन कि आकाशमा निवास गरी घमण्ड गर । यसकारण निस्क, निःसन्देह तिमी अपमानितहरूमध्ये हौ ।[2]

قَالَ أَنْظِرْنِي إِلَىٰ يَوْمِ يُبْعَثُونَ ⑭

(१४) त्यस (शैतान) ले भन्यो कि मलाई (प्रलयसम्म) अवसर प्रदान गरिदिनुस् जब मानिसहरू पुनर्जीवित गरिनेछन् ।

قَالَ إِنَّكَ مِنَ الْمُنْظَرِينَ ⑮

(१५) (अल्लाह) ले भन्यो कि तिमीलाई अवसर प्रदान गरियो ।[3]

कुनै सम्मान हुनसक्छ र ? तृतीय, उसले स्वयं आदेशको अगाडि अनुमानले काम लियो ? जुन कुनै पनि अल्लाहको भक्तको आचरण हुन सक्दैन । यसको अतिरिक्त त्यसको अनुमान पनि भ्रष्ट अनुमान थियो । अग्नि, माटो भन्दा कुन प्रकारले श्रेष्ठ हुनसक्दछ ? अग्निमा उत्तेजना, तथा प्रज्वलन हुने बाहेक अरू के छ र ? जबकि माटोमा शान्ति तथा स्थिरता छ । यसमा फल्ने-फुल्ने अधिकता तथा सुधारको विशेषता छ । यी गुणहरू अग्निभन्दा हरेक प्रकारले श्रेष्ठ तथा अधिक लाभकारी छ । यस आयतबाट यो ज्ञान भयो कि अग्निबाट भयो । जस्तो कि हदीसमा वर्णित छ, "फरिश्ताहरू प्रकाशबाट, इब्लीस अग्निशिखाबाट तथा आदम माटोबाट पैदा गरिएका हुन् ।" (सहीह मुस्लिम किताबुल जुहद, बाब अहादीसे मुतफर्रिकः)

[1]अधिकांश व्याख्याकारहरूले "यसबाट" को अर्थ यो गरेका छन् कि अर्थात् स्वर्गबाट निस्क र केहीले "यस" बाट को अर्थ यो लगाएका छन् कि आकाश लोकबाट तल झर । आदरणीय अनुवादकले यही दोस्रो अर्थ मानेर त्यसको अनुवाद "आकाशबाट झर" गर्नु भएको छ ।

[2]अल्लाहको आदेशको समक्ष घमण्ड गर्ने आदर तथा सम्मानको होइन बरू अनादर तथा अपमानको अधिकारी हुन्छ ।

[3]अल्लाहले त्यसको आग्रहमा यो अवसर दियो जुन त्यसको ज्ञान तथा इच्छा अनुसार थियो, तैपनि यसबाट कुरा बुझिन्न कि उसले यस्तो यसकारण गऱ्यो कि आफ्ना भक्तहरूको परीक्षा लिन सकोस् कि को त्यसको भक्त बन्दछ र को शैतानको पुजारी ।

قَالَ فَبِمَآ أَغْوَيْتَنِي لَأَقْعُدَنَّ لَهُمْ صِرَاطَكَ الْمُسْتَقِيمَ ﴿١٦﴾

(१६) त्यस (शैतानले) भन्यो तिमीले मलाई विचलनमा पार्नुको कारण[1] म पनि उनको निम्ति सोझो मार्गमा घात लगाएर बस्छु।

ثُمَّ لَآتِيَنَّهُم مِّن بَيْنِ أَيْدِيهِمْ وَمِنْ خَلْفِهِمْ وَعَنْ أَيْمَانِهِمْ وَعَن شَمَائِلِهِمْ ۖ وَلَا تَجِدُ أَكْثَرَهُمْ شَاكِرِينَ ﴿١٧﴾

(१७) अनि तिनका अगाडि तथा पछाडिबाट एवं दायाँ तथा बायाँबाट आक्रमण गर्नेछु।[2] तथा तपाईंले यिनीहरूमा अधिकतरलाई कृतज्ञ पाउनु हुनेछैन।[3]

قَالَ اخْرُجْ مِنْهَا مَذْءُومًا مَّدْحُورًا ۖ لَّمَن تَبِعَكَ مِنْهُمْ لَأَمْلَأَنَّ جَهَنَّمَ مِنكُمْ أَجْمَعِينَ ﴿١٨﴾

(१८) (अल्लाह) ले भन्यो, तँ यहाँबाट अपमानित बहिष्कृत भई गइहाल, तिनीहरूमध्ये जसले पनि तेरो अनुसरण गर्नेछ म तिमी सबैद्वारा नरकलाई अवश्य भरिदिनेछु।

وَيَا آدَمُ اسْكُنْ أَنتَ وَزَوْجُكَ الْجَنَّةَ فَكُلَا مِنْ حَيْثُ شِئْتُمَا وَلَا تَقْرَبَا

(१९) तथा (हामीले भन्यौं कि) हे आदम! तिमी तथा तिम्रो पत्नी स्वर्गमा निवास गर, अनि

---

[1]कुमार्ग त त्यो अल्लाहको सृष्टि उत्पत्तिको इच्छा अनुसार भयो, परन्तु उसले पनि मूर्तिपूजकहरूको जस्तै लाक्षन बनायो, जुनप्रकार उनीहरू भन्थे कि यदि अल्लाहले चाहेको भए हामीले शिर्क गर्ने थिएनौं।

[2]अर्थ यो हो कि प्रत्येक पुण्य तथा पापको मार्गमा बस्नेछु। पुण्यबाट उनीहरूलाई रोक्नेछु तथा पापलाई उनको समक्ष सुन्दर तथा आकर्षित बनाएर प्रस्तुत गर्नेछु तथा तिनलाई अपनाउन शिक्षा दिनेछु।

[3]शाकेरीनको अर्को अनुवाद एक अल्लाहलाई मान्नेसित पनि गरिएको छ। अर्थात् अधिकतर मानिसहरूलाई म शिर्कमा लिप्त गरिदिनेछु। शैतानले आफ्नो यो विचार वास्तवमा सत्य गरेर देखायो।

﴿ وَلَقَدْ صَدَّقَ عَلَيْهِمْ إِبْلِيسُ ظَنَّهُ فَاتَّبَعُوهُ إِلَّا فَرِيقًا مِّنَ الْمُؤْمِنِينَ ﴾

"शैतानले आफ्नो विचार सत्य गरेर देखायो, मोमिनहरूको एक गुटलाई छाडेर सबै उसको पछि लागिहाले।" (सूर: सबा-२०)

यसैकारण हदीसमा शैतानबाट बच्नको लागि तथा कुर्आनमा त्यसको छल, कपट तथा जालबाट पन्छिनको निम्ति बडो चेतावनी दिइएको छ।

هٰذِهِ الشَّجَرَةَ فَتَكُونَا مِنَ الظّٰلِمِينَ ⑲

जुन स्थानबाट इच्छा हुन्छ खाउ एवं यस वृक्षको निकट नजाउ अन्यथा अत्याचारी हुनेछौ ।[1]

فَوَسْوَسَ لَهُمَا الشَّيْطٰنُ لِيُبْدِيَ لَهُمَا مَا وُرِيَ عَنْهُمَا مِنْ سَوْاٰتِهِمَا وَقَالَ مَا نَهٰىكُمَا رَبُّكُمَا عَنْ هٰذِهِ الشَّجَرَةِ إِلَّآ أَنْ تَكُونَا مَلَكَيْنِ أَوْ تَكُونَا مِنَ الْخٰلِدِينَ ⑳

(२०) अनि शैतानले दुबैमा शंका[2] उत्पन्न गऱ्यो ताकि दुबैका लागि उनीहरूका गुप्ताङ्ग[3] लाई प्रकट गरिदेओस् तथा भन्यो कि तिमी दुबैको पोषकले तिमीलाई यस वृक्षबाट यसैकारण रोकेको छ कि तिमी दुबै फरिश्ता भइहाल्नेछौ अथवा अमर भइहाल्नेछौ ।

وَقَاسَمَهُمَآ إِنِّي لَكُمَا لَمِنَ النّٰصِحِينَ ㉑

(२१) त्यसले ती दुबैका समक्ष शपथ लियो कि त्यो उनको शुभ चिन्तक हो ।[4]

[1]अर्थात् मात्र यस वृक्ष बाहेक जहाँबाट तथा जति चाहन्छौं खाउ । यस वृक्षको फल खानुमा प्रतिबन्ध मात्र परीक्षाको रूपमा थियो ।

[2]वसवसाको अर्थ हो सानो स्वर तथा त्यो नराम्रो कुरो जुन शैतान मनमा उत्पन्न गर्दछ ।

[3]अर्थात् यस बहकाउनुबाट शैतानको लक्ष्य आदम तथा हौवालाई स्वर्गको वस्त्रबाट बञ्चित गरी उनीहरूलाई लज्जित गर्नु थियो जुन तिनीहरूलाई स्वर्गमा लगाउन प्राप्त भएका थिए । (سوأت) वहुवचन हो, जसको अर्थ नराम्रो लाग्नु हो तथा त्यसको अर्थ गुप्ताङ्ग यसकारण लिइएको छ कि यसलाई खुला रूपमा देखिनु नराम्रो मानिन्छ ।

[4]स्वर्गमा जुन सुख सुविधाहरू आदरणीय आदम तथा हौवालाई उपलब्ध थियो त्यसद्वारा शैतानले दुवैलाई प्रलोभन दियो तथा यो भूठ बोल्यो कि अल्लाह तिमीलाई सधैं स्वर्गमा राख्न चाहँदैन, यसैले यस वृक्षको फल खानुबाट मनाही गरेको छ किनभने यसको प्रभाव नै यही छ कि जो त्यसलाई खान्छ, त्यो फरिश्ता हुनेछ अथवा त्यसलाई स्थाई जीवन प्राप्त हुन्छ । त्यसपछि सौगन्ध खाएर आफूलाई शुभचिन्तक सिद्ध गऱ्यो, जसबाट आदरणीय आदम तथा हौवा प्रभावित हुन पुगे, यसकारण कि अल्लाहमा आस्था राख्ने अल्लाहको नाममा धोका खान्छन् ।

فَدَلّٰىهُمَا بِغُرُورٍ فَلَمَّا ذَاقَا الشَّجَرَةَ بَدَتْ لَهُمَا سَوْاٰتُهُمَا وَطَفِقَا يَخْصِفٰنِ عَلَيْهِمَا مِنْ وَّرَقِ الْجَنَّةِ ؕ وَنَادٰىهُمَا رَبُّهُمَآ اَلَمْ اَنْهَكُمَا عَنْ تِلْكُمَا الشَّجَرَةِ وَاَقُلْ لَّكُمَآ اِنَّ الشَّيْطٰنَ لَكُمَا عَدُوٌّ مُّبِيْنٌ ﴿٢٢﴾

(२२) यसप्रकार ढाँटेर दुबैलाई तल झाऱ्यो,[1] दुबैले वृक्षको स्वाद लिने बित्तिकै दुबैका लागि तिनका गुप्ताङ्ग प्रकट भइहाले तथा उनीहरू आफूमाथि स्वर्गका पातहरू टाँस्न थाले[2] तथा उनको स्वामीले दुबैलाई पुकाऱ्यो कि के मैले तिमी दुबैलाई यस वृक्षबाट रोकेको थिइन तथा तिमीसित भनिन कि शैतान तिम्रो खुल्ला रूपले शत्रु हो ।[3]

قَالَا رَبَّنَا ظَلَمْنَآ اَنْفُسَنَا ٚ وَاِنْ لَّمْ تَغْفِرْ لَنَا وَتَرْحَمْنَا لَنَكُوْنَنَّ مِنَ الْخٰسِرِيْنَ ﴿٢٣﴾

(२३) दुबैले भने, हाम्रा प्रभु ! हामीले आफूमाथि अत्याचार गऱ्यौं तथा यदि तिमीले हामीलाई क्षमा गरेनौ तथा हामीमाथि दया गरेनौं भने हामी घाटामा पर्नेहरूमध्ये भइहाल्नेछौं ।[4]

[1](تدلية و ادلاء) अरबी शब्दको अर्थ हो कुनै वस्तुलाई माथिबाट तल लग्नु । अत: शैतानले उनीहरूलाई उच्च पदबाट झरालेर निषेधित वृक्षको फल खानसम्म लग्यो ।

[2]यो त्यस अवज्ञाको प्रभाव भयो जुन आदम तथा हौवाबाट अन्जान तथा विना सोच-विचारको कारण भयो । अनि दुबै लज्जित भएर स्वर्गका पातहरू गाँसेर आफ्ना गुप्ताङ्गहरूलाई छोप्न लागे । वहब बिन मुनब्बा भन्दछन् कि त्यसभन्दा पूर्व उनीहरूलाई अल्लाह तआलाको तर्फबाट एउटा यस्तो प्रकाशमान वस्त्र दिइएको थियो जुन यद्यपि अदृश्य थियो तैपनि एक-अर्काका गुप्ताङ्गहरूको लागि आवरणको काम दिएको थियो । (इब्ने कसीर)

[3]अर्थात् यस चेतावनीको पश्चात पनि तिमी शैतानका वसवसाहरू (शंका) को शिकार भयौ । यसबाट ज्ञात भयो कि शैतानका जाल पनि बडो आकर्षक हुन्छन् तथा तिनीबाट बच्नको लागि बडो प्रयत्न तथा प्रत्येक समय सावधान रहनुको आवश्यकता छ ।

[4]क्षमा-याचनाका यी ती वाक्य नै हुन् जुन आदरणीय आदमले सिके, जस्तो कि सूर:अल-बकर: आयत संख्या-३७ मा स्पष्टरूपले वर्णित छ (हेर्नुस् वर्णित आयतको व्याख्या) । यस्तो प्रतीत हुन्छ कि शौतानले अल्लाह तआलाका आदेशहरूको अवहेलना मात्रै गरेन बरू त्यो अडिग पनि भइहाल्यो तथा आफ्नो अनुमानित तर्कहरूद्वारा त्यसलाई उचित पनि ठान्दैरहयो । परिणाम स्वरूप तिरस्कृत गरियो तथा सधैंको लागि धिक्कृत भयो तथा आदरणीय आदम आफ्नो भूललाई स्वीकार गरी क्षमा-याचना गर्नथाले, त अल्लाहको कृपा तथा क्षमाको अधिकारी भए । यसप्रकार दुबै प्रकारका माँगहरूको स्पष्टीकरण भयो ।

قَالَ اهْبِطُوا بَعْضُكُمْ لِبَعْضٍ عَدُوٌّ ۚ وَلَكُمْ فِي الْأَرْضِ مُسْتَقَرٌّ وَمَتَاعٌ إِلَىٰ حِينٍ ﴿٢٤﴾

(२४) अल्लाह (तआला) ले भन्यो, तिमी तल झर, तिमी परस्पर शत्रु हौ तथा तिमीलाई एक समयसम्म धर्तीमा निवास गर्नु एवं लाभान्वित हुनुछ ।

قَالَ فِيهَا تَحْيَوْنَ وَفِيهَا تَمُوتُونَ وَمِنْهَا تُخْرَجُونَ ﴿٢٥﴾

(२५) भन्यो कि तिमीले त्यसैमा जीवनयापन गर्नेछौ तथा त्यसैमा मर्नेछौ र त्यसैबाट निकालिनेछौ ।

يَا بَنِي آدَمَ قَدْ أَنْزَلْنَا عَلَيْكُمْ لِبَاسًا يُوَارِي سَوْآتِكُمْ وَرِيشًا ۖ وَلِبَاسُ التَّقْوَىٰ ذَٰلِكَ خَيْرٌ ۚ ذَٰلِكَ مِنْ آيَاتِ اللَّهِ لَعَلَّهُمْ يَذَّكَّرُونَ ﴿٢٦﴾

(२६) हे आदमका पुत्रहरू ! हामीले तिमीलाई यस्तो वस्त्र प्रदान गर्‍यौं, जुन तिम्रा गुप्ताङ्गलाई ढाकोस् तथा शोभा देओस् ।[१] एवं संयम (परहेज़गारी) को वस्त्र[२] नै उत्तम छ[३] यी अल्लाहका लक्षण हुन् ताकि तिनीहरू स्मरण गरून् ।



अर्थात् शैतानको मार्गको पनि तथा अल्लाहका भक्तहरूको मार्गको पनि । पाप गरेर घमण्ड गर्नु तिनको पुनरावृत्ति गरी त्यसलाई उचित सिद्ध गर्नको लागि तर्कहरू थुपार्नु शैतानी बाटो हो । तथा पापको पश्चात लज्जित भई अल्लाहको दरबारमा नतमस्तक हुनु तथा क्षमा-याचना गर्नु अल्लाहका भक्तहरूको मार्ग हो । (اللّهم اجعلنا منهم)

[१](سوآت) शरीरका ती अङ्ग हुन् जसलाई छोप्नु आवश्यक छ, जस्तै गुप्ताङ्ग तथा (ريشا) त्यो वस्त्र हो जो शोभा एवं सुन्दरताको लागि लगाईयोस् मानौं प्रथम आवश्यक वस्त्र हो एवं दोस्रो पूर्ति एवं अधिकताको लागि हुन्छ, अल्लाहले यी दुबै प्रकारका लागि संसाधन उत्पादन गर्‍यो ।

[२]यसबाट तात्पर्य केही जानकारहरूको विचारले त्यो वस्त्र हो जुन संयमी प्रलयका दिन ग्रहण गर्नेछन्, तथा केहीका निकट निष्ठा एवं केहीका विचारले सत्कर्म तथा अल्लाहको भय हो, सबैको भावार्थ लगभग एउटै हो कि यस्तो वस्त्र जसलाई धारण गरेर मनुष्य अंहकारको सट्टा अल्लाहसित तर्सोस् तथा विश्वास एवं सत्कर्मका माँगहरूलाई पूरा गरोस् ।

[३]यसबाट यो भाव निस्कन्छ कि यद्यपि शोभा तथा सौन्दर्यको लागि वस्त्र धारण गर्नु उचित छ, तैपनि वस्त्रमा यस्तो सादगी अति प्रिय छ जुन पवित्रता तथा संयमको द्योतक हो । यसबाहेक नयाँ वस्त्र धारण गर्दाखेरी यो प्रार्थना गरियोस् ।

(२७) हे आदमका पुत्रहरू ! तिमीलाई शैतानले ठगीमा नपारोस्, जस्तै तिम्रा माता-पितालाई स्वर्गबाट निष्काशित गरायो, त्यसले उनको वस्त्र फुकाल्न लगायो ताकि उनीहरूलाई उनका गुप्ताङ्ग देखाओस्, निःसन्देह त्यसले तथा त्यसको जनजातिले तिमीलाई यस्तो ठाउँबाट देख्दछन् जहाँबाट कि तिमी उनलाई देख्न सक्दैनौ,[1] हामीले शैतानहरूलाई उनीहरूका मित्र बनाइदियौं जो ईमान (विश्वास)[2] भएका छैनन् ।

يَٰبَنِيٓ ءَادَمَ لَا يَفۡتِنَنَّكُمُ ٱلشَّيۡطَٰنُ كَمَآ أَخۡرَجَ أَبَوَيۡكُم مِّنَ ٱلۡجَنَّةِ يَنزِعُ عَنۡهُمَا لِبَاسَهُمَا لِيُرِيَهُمَا سَوۡءَٰتِهِمَآۚ إِنَّهُۥ يَرَىٰكُمۡ هُوَ وَقَبِيلُهُۥ مِنۡ حَيۡثُ لَا تَرَوۡنَهُمۡۗ إِنَّا جَعَلۡنَا ٱلشَّيَٰطِينَ أَوۡلِيَآءَ لِلَّذِينَ لَا يُؤۡمِنُونَ ٢٧

(२८) तथा उनी जब कुनै दुराचार गर्दछन् त भन्दछन् कि हामीले आफ्ना पूर्वजहरूलाई यसै गरेका नै पायौं तथा अल्लाहले हामीलाई यसको आदेश दिएको छ। तपाईं भनिदिनुस् कि अल्लाह दुराचारको

وَإِذَا فَعَلُواْ فَٰحِشَةٗ قَالُواْ وَجَدۡنَا عَلَيۡهَآ ءَابَآءَنَا وَٱللَّهُ أَمَرَنَا بِهَاۗ قُلۡ إِنَّ ٱللَّهَ لَا يَأۡمُرُ بِٱلۡفَحۡشَآءِۖ

الحمد للهِ الذي كَسَانِي مَا أوارِي بِهِ عَوْرَتِي، وَأَتَجَمَّلُ بِهِ فِي حَيَاتِي

"सबै प्रशंसा त्यस अल्लाहका लागि छन् जसले मलाई यस्तो वस्त्र लगाउन लगायो जसबाट म आफ्नो गुप्ताङ्ग छुपाउन सकुँ र आफ्नो जीवनमा त्यसबाट शोभा प्राप्त गरूँ ।"

(तिर्मिजी, प्रार्थना अध्याय-इब्ने माज, वस्त्र अध्याय, मनुष्य नयाँ वस्त्र धारण गर्दाखेरी के प्रार्थना गरोस्)

[1]यसमा ईमान भएकाहरूलाई शैतान तथा त्यसको जनजाति अर्थात् त्यसका शिष्यहरूबाट सावधान गरिएको छ कि कही तिम्रो असावधानी तथा आलस्यबाट लाभ उठाएर तिमीलाई पनि त्यसै प्रकार परीक्षा तथा कुमार्गमा नपारिदेओस्, जुन प्रकार तिम्रा माता-पिता (आदम तथा हौवा) लाई उसले स्वर्गबाट निष्कासन गरायो तथा स्वर्गको वस्त्र फुकाल्न लगायो । विशेषरूपले जब तिनी दृष्टिगोचर हुँदैनन् तब तिनीबाट बाँच्ने व्यवस्था तथा चिन्ता अधिक हुनुपर्छ ।

[2]अर्थात् जसमा ईमान छैन ती नै उसका मित्र हुन् तथा विशेषरूपले उसको शिकार बन्दछन् । तैपनि निष्ठावानहरूमाथि पनि जाल हाल्दछ । यदि अरू केही गर्न सकेन भने गुप्त शिर्क (देखावटीको पुण्य) तथा प्रत्यक्ष शिर्क (मिश्रणवाद) मा लीन गरिदिन्छ तथा यसप्रकार त्यसले उनीहरूलाई ईमानको पूँजीबाट वञ्चित गरिदिन्छ ।

أَتَقُولُونَ عَلَى اللّٰهِ مَا لَا تَعْلَمُونَ ﴿٢٨﴾

आदेश गर्दैन । के तिमी अल्लाहबारे यस्तो कुरा गर्दछौ जुन तिमी जान्दैनौं ?[1]

قُلْ أَمَرَ رَبِّي بِالْقِسْطِ وَأَقِيمُوا وُجُوهَكُمْ عِندَ كُلِّ مَسْجِدٍ وَادْعُوهُ مُخْلِصِينَ لَهُ الدِّينَ كَمَا بَدَأَكُمْ تَعُودُونَ ﴿٢٩﴾

(२९) तपाईं भनि दिनुस् कि मेरो पोषकले मलाई न्यायको आदेश दिएको छ ।[2] तथा प्रत्येक सजदाको (ढोगको) समय आफ्नो अनुहारलाई सोझो दिशामा गर[3] तथा त्यस (अल्लाह) को लागि धर्मलाई स्वच्छ गरी त्यसलाई पुकार । उसले जसरी

[1]इस्लामभन्दा पूर्व मूर्तिपूजकहरूले बैतुल्लाह (काअबा) को परिक्रमा नाङ्गो भई गर्दथे तथा भन्थे कि हामी त्यस अवस्थाको अनुसार परिक्रमा गर्दछौं जुन त्यसबखत थियो जब हाम्रा आमाहरूले हामीलाई जन्माएका थिए । केही भन्दछन् कि उनीहरूले भन्दथे कि हामी जुन वस्त्र लगाउँछौं त्यसमा अल्लाहका आदेशहरूको अवहेलना गरिराखेका हुन्छौं, यसकारण यस वस्त्रमा परिक्रमा गर्नु उचित छैन । अतः उनीहरूले वस्त्र झिकेर परिक्रमा गर्दथे तथा स्त्रीहरू पनि नाङ्गै परिक्रमा गर्दथे, केवल आफ्ना गुप्ताङ्ग माथि कुनै वस्त्र अथवा छाला राख्ने गर्दथे । आफ्ना यस अपमानित कर्मका लागि अरू दुईटा तर्क दिए । एउटा त यो कि हामीले आफ्ना पूर्वजहरूलाई यसैप्रकार गरिराखेका पायौं । दोस्रो यो कि अल्लाहले हामीलाई यसको आदेश दिएको छ । अल्लाहले यसको खण्डन गऱ्यो कि यो कसरी हुनसक्छ कि अल्लाह तआलाले अभद्र, असभ्य कार्यहरूको आदेश देओस् ? अर्थात् तिमी अल्लाहमाथि त्यस कुराको लान्छना लगाउँछौं जसको त्यसले आदेश दिएन । यस आयतमा ती अनुकरणवादीहरूलाई सचेत तथा सतर्क गरिएको छ, जो आफ्ना पूर्वज, महात्मा तथा महान व्यक्तिहरूको पालन गर्दछन्, जब उनीहरूलाई पनि सत्य कुरा भनिन्छ, त उनी पनि त्यसको समक्ष यही तर्क प्रस्तुत गर्छन् कि हाम्रा पूर्वजले पनि यही गर्दै आएका छन् अथवा हाम्रा इमाम तथा पीरको यही आदेश छ । यो त्यो व्यवहार हो जसमा कि यहूदी आफ्ना यहूदीयतमा, इसाई आफ्ना ईसाईयतमा तथा परिवर्तनकारी आफ्ना परिवर्तित परिपाटीमा दृढ छन् । (फ़तहुल क़दीर)

[2]न्यायको भावार्थ केही जानकारहरूले (لا إله إلا الله) अर्थात् एकेश्वरवाद (तौहीद) लिएका छन् ।

[3]इमाम शौकानीले यसको अर्थ यो वर्णित गर्नुभएको छ कि, "आफ्ना नमाज़मा आफ्ना मुखहरू क़िब्लातिर फर्काउ, चाहे तिमी कुनै पनि मस्जिदमा होउ ।" तथा इमाम इब्ने कसीरले यसबाट दृढता अर्थात अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लमको अनुकरणको भाव लिनुभएको छ तथा आगामी वाक्यबाट अल्लाहको लागि सिद्ध हुनु लिनुभएको छ । तथा भन्नुभएको छ कि प्रत्येक कर्मको स्वीकृतिको लागि आवश्यक छ कि त्यो धार्मिक नियम अनुसारको होस् तथा अन्य मात्र अल्लाहको प्रसन्नताको लागि होस् । आयतमा यी कुराहरूमाथि जोड दिइएको छ ।

तिमीलाई प्रारम्भमा पैदा गऱ्यो त्यसरी नै पुन: जन्म लिनेछौ ।

فَرِيقًا هَدٰى وَفَرِيقًا حَقَّ عَلَيْهِمُ الضَّلٰلَةُ ۗ إِنَّهُمُ اتَّخَذُوا الشَّيٰطِينَ أَوْلِيَاءَ مِن دُونِ اللّٰهِ وَيَحْسَبُونَ أَنَّهُم مُّهْتَدُونَ ﴿٣٠﴾

(३०) तथा त्यस (अल्लाह) ले केही मानिसहरूलाई मार्गदर्शन गऱ्यो र केही कुपथका पात्र बन्न पुगे, उनीहरूले अल्लाह बाहेक शैतानहरू (असुर) लाई आफ्नो मित्र बनाए तथा ठान्दछन् कि उनी पथगामी छन् ।

يٰبَنِي آدَمَ خُذُوا زِينَتَكُمْ عِندَ كُلِّ مَسْجِدٍ وَكُلُوا وَاشْرَبُوا وَلَا تُسْرِفُوا ۚ إِنَّهُ لَا يُحِبُّ الْمُسْرِفِينَ ﴿٣١﴾

(३१) हे आदमका पुत्रहरू ! मस्जिदमा जाँदा प्रत्येक समय आफ्नो शोभा धारण गर[१] तथा खाउ, पिउ र अपव्यय नगर । नि:सन्देह जो अपव्यय गर्दछन्, अल्लाह उनीसित प्रेम गर्दैन ।[२]

قُلْ مَنْ حَرَّمَ زِينَةَ اللّٰهِ الَّتِي أَخْرَجَ لِعِبَادِهِ وَالطَّيِّبٰتِ مِنَ الرِّزْقِ ۚ قُلْ هِيَ لِلَّذِينَ آمَنُوا فِي الْحَيٰوةِ الدُّنْيَا خَالِصَةً يَوْمَ الْقِيٰمَةِ ۗ كَذٰلِكَ نُفَصِّلُ الْآيٰتِ لِقَوْمٍ يَعْلَمُونَ ﴿٣٢﴾

(३२) (हे ईशदूत !) तपाईं भनिदिनुस् कि त्यस शोभालाई कसले वर्जित गरेको छ जसलाई अल्लाहले आफ्ना भक्तहरूको लागि उत्पन्न गरेको छ तथा पवित्र जीविकालाई, तपाईं भनिदिनुस् कि त्यो भौतिक जीवनमा तिनीहरूका लागि हो जसले विश्वास गरे (तथा) विशेषरूपले

[१]आयतमा शोभासित तात्पर्य वस्त्र हो । यसको सम्बन्ध पनि मूर्तिपूजकहरूबाट नाङ्गो परिक्रमासित छ, अत: उनीहरूलाई भनियो कि वस्त्र धारण गरी अल्लाहको उपासना गर ।

[२]अपव्यय (सीमाभन्दा बाहिर जानु) कुनै पनि विषयमा यहाँसम्मकि खाद्य तथा पेयमा पनि प्रिय मानिएको छैन । एक हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "जे चाहन्छौ खाउ, जे चाहन्छौ लगाउ । परन्तु दुईटा कुराहरूबाट बच, अपव्यय तथा अहंकारबाट ।" (सहीह बुख़ारी किताबुल लिबास बाब क़ौलिल्लाहे तआ़ला "कुल मन हर्रम, ज़ीनतल्लाह") केही सलफ़ (ज्ञानी पूर्वजहरू) को कथन छ । (كلوا و اشربوا ولا تسرفوا) यस आधा आयतमा सारा चिकित्सा पद्धति एकत्रित गरिएको छ । (इब्ने क़सीर)

अन्त दिवसमा उनीहरूकै लागि हुन् ।[1] हामी आयतहरूको यसैप्रकार विस्तृत वर्णन गरिराखेका छौं उनीहरूको लागि जो ज्ञान भएका हुन्छन् ।

قُلْ إِنَّمَا حَرَّمَ رَبِّيَ الْفَوَاحِشَ مَا ظَهَرَ مِنْهَا وَمَا بَطَنَ وَالْإِثْمَ وَالْبَغْيَ بِغَيْرِ الْحَقِّ وَأَن

(३३) तपाईं भन्नुस् कि मेरो पोषकले सबै व्यक्त एवं गुप्त अशिष्ट विषय[2] लाई वर्जित गरेको छ तथा पाप एवं अनुचित अतिक्रमणलाई[3] तथा

[1]मूर्तिपूजकहरूले जुनप्रकार परिक्रमाको समय वस्त्र धारण गर्न अप्रिय मानेका थिए यसैप्रकार केही उचित पदार्थहरूलाई पनि अल्लाहको सामीप्यको लागि वर्जित गरिहालेका थिए, जस्तो कि केही सूफ़िहरू (साधु) पनि यस्तै गर्दछन् तथा धेरैजसो वैध कुराहरू आफ्ना मूर्तिहरूका नाममा दान गर्नलाई अवैध मान्ने गर्दथे। अल्लाहले भन्यो कि जुन पदार्थहरूलाई उसले मानिसहरूको शोभाको लागि (उदाहरण अर्थ वस्त्र आदि एवं) स्वादिष्ट खाद्य पदार्थ बनाएको छ तिनीहरूलाई कसले निषेधित गर्न सक्तछ । यसको अभिप्राय यो हो कि अल्लाहबाट उचित बनाइएका वस्त्रहरू कसैले वर्जित गर्नबाट वर्जित हुँदैन, त्यो उचित नै रहने छ, यी उचित एवं पवित्र कुराहरू अल्लाहले वास्तवमा आफ्ना भक्तहरूको लागि बनाएको छ । नास्तिक मूर्तिपूजक पनि यसबाट लाभान्वित हुन्छन् बरू कहिलेकाही सांसारिक सुख-सुविधामा उनीहरू मुसलमानहरूभन्दा अधिक सफल देखिन्छन्। किन्तु यो सामाजिक तथा अस्थिर सुख हो, जसको रहस्यलाई अल्लाह नै जान्दछ परन्तु परलोकमा यी अनुकम्पाहरू मुसलमानहरूकै लागि हुनेछन् किनभने कृतघ्नहरूका लागि जुनप्रकार स्वर्ग निषेधित हुनेछ त्यसैगरी यो खाद्य तथा पेय पनि निषेधित हुनेछन् ।

[2]प्रत्येक कुकर्मसित तात्पर्य यहाँ केही विद्वानहरू निकट बेश्याको कोठामा गई व्यभिचार गर्नु तथा गुप्त कुकर्मसित तात्पर्य कुनै प्रेमिकासँग विशेष सम्बन्ध स्थापित गर्नु हो। केहीका निकट प्रत्यक्ष कुकर्मबाट तात्पर्य नजीकका निषेधित स्त्रीहरूसित विवाह गर्नु (जुन वर्जित छ) लिइएको छ । तर उचित कुरो त यो हो कि यो कुनै एक विशेष परिस्थितिसित सम्बन्धित छैन, बरू सामान्य छ । जस्तै फिल्म, नाटक, टि.भी., भि.सी.आर.,अभद्र-असभ्य समाचार एवं पत्र-पत्रिकाहरू, नृत्य, मदिरापान, नृत्याङ्गनाहरूको पुरूषका समक्ष नृत्य तथा पुरूष-स्त्री मिश्रण, मेंहदी तथा विवाहका रीति रीवाजमा सामान्यतया जुन प्रदर्शन हुन्छ, आदि यी सबै कुकर्म हुन् । (أعاذ نا الله منها)

[3]पाप, अल्लाहको अवज्ञाको नाम हो । तथा एक हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो “पाप त्यो हो जुन तेरो मनमा खट्किन्छ तथा मानिसहरूलाई यसको सूचना भए पश्चात तिमी नराम्रो ठान्दछौं ।” (सहीह मुस्लिम किताबुल बिर्र) तथा केहीले भन्दछन् कि पाप त्यो हो जसको प्रभाव त्यसलाई गर्ने व्यक्तिसम्म सीमित होस् तथा (بغْي) (बगूय) त्यो हो कि यसको प्रभाव अरूसम्म पुगोस् ।

تُشْرِكُوا بِاللّٰهِ مَا لَمْ يُنَزِّلْ بِهٖ سُلْطٰنًا وَّاَنْ تَقُوْلُوْا عَلَى اللّٰهِ مَا لَا تَعْلَمُوْنَ ﴿٣٣﴾

अल्लाहसँग त्यसलाई मिश्रित गर्नलाई जसको उसले कुनै तर्क अवतरित गरेको छैन तथा अल्लाहमाथि अज्ञात कुराहरू बोल्नलाई ।

وَلِكُلِّ اُمَّةٍ اَجَلٌ ۚ فَاِذَا جَآءَ اَجَلُهُمْ لَا يَسْتَاْخِرُوْنَ سَاعَةً وَّلَا يَسْتَقْدِمُوْنَ ﴿٣٤﴾

(३४) तथा प्रत्येक समुदायको एउटा निर्धारित समय छ[1] अनि जब तिनको निश्चित समय आइपुग्छ तब न एक क्षणको लागि ढिलो हुनेछ न छिटो ।

يٰبَنِيْۤ اٰدَمَ اِمَّا يَاْتِيَنَّكُمْ رُسُلٌ مِّنْكُمْ يَقُصُّوْنَ عَلَيْكُمْ اٰيٰتِيْ ۙ فَمَنِ اتَّقٰى وَاَصْلَحَ فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿٣٥﴾

(३५) हे आदमका पुत्रहरू ! यदि तिम्रो पासमा तिमीमध्येबाट मेरो रसूल (दूत) आउँछन् जो तिम्रा समक्ष मेरा आयतहरूको वर्णन गर्दछन् त जसले संयम गर्नेछ तथा सुधार गर्नेछ, उनीहरूलाई न कुनै भय हुनेछ र न उनी दुःखी हुनेछन् ।[2]

وَالَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا وَاسْتَكْبَرُوْا عَنْهَاۤ اُولٰٓئِكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٣٦﴾

(३६) तथा जसले हाम्रा आदेशहरूलाई नकारे एवं उनीसित अहंकार गरे तिनै नरकीय हुन्, तिनै त्यसमा सधैं रहनेछन् ।[3]

यहाँ बग़ीसित अनावश्यकको अर्थ, अनावश्यक अत्याचार तथा कठोरता जस्तै मानिसहरूका अधिकारको हनन गर्नु कसैको माल खोस्नु, अनावश्यक कूटपीट गर्नु तथा अपशब्द एवं कटुवचन भनेर अपमानित गर्नु आदि हो ।

[1]निर्धारित समयसित तात्पर्य त्यो अवसर हो जुन अल्लाह (परमेश्वर) प्रत्येकको परीक्षाको लागि दिन्छ कि त्यसले यस अवसरको लाभ उठाएर अल्लाहलाई प्रसन्न गर्ने प्रयास गर्दछ अथवा त्यसको विद्रोह एवं दुष्टतामा झन् बृद्धि हुन्छ । यो अवसर कहिले आजीवन हुन्छ अर्थात् सांसारिक जीवनमा त्यसले समात्दैन बरू परलोकमा नै दण्ड दिनेछ, यिनको निर्धारित समय प्रलयदिवस नै हो तथा जसलाई संसारमा दण्डित गर्दछ तिनको निर्धारित समय त्यो हो जब उनलाई समात्छ ।

[2]यो ती मानिसहरूका सुपरिणामको वर्णन हो, जुन संयम तथा सत्कर्मबाट सुशोभित हुनेछन् । कुर्‌आनले ईमानका साथै अधिकतर स्थानमा पुण्यका कामहरूको वर्णन अवश्य गरेको छ, जसबाट ज्ञात हुन्छ कि अल्लाहका समक्ष त्यही ईमान मान्य छ जसको साथमा पुण्यको कार्य पनि हुनेछन् ।

[3]यसमा निष्ठावानहरूको विपरीत ती मानिसहरूको कुपरिणामहरूको वर्णन गरिएको छ, जो अल्लाहका आदेशहरूलाई झूठा भन्दछन् तथा उनका समक्ष घमण्ड गर्दछन् । ईमान भएका तथा

فَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا أَوْ كَذَّبَ بِآيَاتِهِ ۚ أُولَٰئِكَ يَنَالُهُمْ نَصِيبُهُمْ مِنَ الْكِتَابِ ۖ حَتَّىٰ إِذَا جَاءَتْهُمْ رُسُلُنَا يَتَوَفَّوْنَهُمْ قَالُوا أَيْنَ مَا كُنْتُمْ تَدْعُونَ مِنْ دُونِ اللَّهِ ۖ قَالُوا ضَلُّوا عَنَّا وَشَهِدُوا عَلَىٰ أَنْفُسِهِمْ أَنَّهُمْ كَانُوا كَافِرِينَ ﴿٣٧﴾

(३७) त्यसभन्दा अधिक अत्याचारी को होला जसले अल्लाहमाथि झूठा आरोप लगायो अथवा त्यसका आयतहरू (आदेश) लाई झूठा भन्यो ? यिनलाई किताबबाट निर्धारित भाग पुग्नेछ[1] यहाँसम्मकि जब तिनको पासमा हाम्रा फरिश्ता (यमदूत) तिनका प्राण निकाल्न आउँछन् त भन्नेछन् कि तिनीहरू कहाँ छन् जसलाई तिमी अल्लाहलाई छाडि पुकार्ने गर्दथ्यौ, उनीहरूले भन्नेछन् हामी त गुमियौं तथा आफू काफ़िर (अधर्मी) हुने कुरो स्वयं स्वीकार गर्नेछन् ।

قَالَ ادْخُلُوا فِي أُمَمٍ قَدْ خَلَتْ مِنْ قَبْلِكُمْ مِنَ الْجِنِّ وَالْإِنْسِ فِي النَّارِ ۖ كُلَّمَا دَخَلَتْ أُمَّةٌ لَعَنَتْ

(३८) त्यसले (अल्लाह) भन्नेछ कि जिन्न तथा मानिसहरूका ती गिरोहहरूसँग जो तिमीभन्दा पूर्व गुज्रिसकेका छन्[2] तिमी पनि नरकमा प्रवेश गर, जतिखेर पनि कुनै गिरोह (समूह) प्रवेश गर्नेछ त अर्कालाई

काफ़िरहरू दुबैको परिणामको वर्णन गर्नुको उद्देश्य यो हो कि मानिसहरूले त्यस व्यवहारलाई अप्नाउन् जसको परिणाम राम्रो छ तथा त्यस व्यवहारबाट टाढा रहून् जसको परिणाम नराम्रो छ ।

[1]यसका विभिन्न भावार्थ वर्णन गरिएका छन् । एक अर्थ कर्म, जीविका तथा आयुसित गरिएको छ अर्थात तिनका भाग्यमा जुन कर्म तथा जीविका छ, त्यसलाई पूरा गरी तथा जति आयु छ, त्यसलाई व्यतीत गरे पश्चात अन्ततः मृत्युलाई नै अंगाल्ने छन् । त्यसैको समान यो आयत छ ।

﴿إِنَّ الَّذِينَ يَفْتَرُونَ عَلَى اللَّهِ الْكَذِبَ لَا يُفْلِحُونَ * مَتَاعٌ فِي الدُّنْيَا ثُمَّ إِلَيْنَا مَرْجِعُهُمْ﴾

"जो अल्लाहमाथि झूठा आरोप लगाउँछन्, उनी सफल हुने छैनन्, संसारका क्षणिक लाभ उठाएर, अन्ततः हाम्रो पासमा उनी फर्केर आउनु छ ।" (सूरः यूनुस-६९, ७०)

[2]उमम, उम्मतको बहुवचन हो । तात्पर्य त्यो वर्ग तथा समुदाय हो, जो अविश्वास एवं विरोध तथा बहुईश्वरवाद तथा अनिष्ठामा एक समान हुनेछन् । (فى) को अर्थ सहित पनि हुनसक्छ, अर्थात तिमीभन्दा पूर्व मनुष्य तथा जिन्नहरूमा तिमी जस्तै यहाँ आइसकेका छन्, उनीहरूसँगै नरकमा प्रवेश गर अथवा उनीहरूमा सम्मिलित होऊ ।

أُخْتَهَا ۖ حَتَّىٰٓ إِذَا ٱدَّارَكُوا۟ فِيهَا جَمِيعًا قَالَتْ أُخْرَىٰهُمْ لِأُولَىٰهُمْ رَبَّنَا هَٰٓؤُلَآءِ أَضَلُّونَا فَـَٔاتِهِمْ عَذَابًا ضِعْفًا مِّنَ ٱلنَّارِ ۖ قَالَ لِكُلٍّ ضِعْفٌ وَلَٰكِن لَّا تَعْلَمُونَ ﴿٣٨﴾

धिक्कार्ने छ[1] यहाँसम्मकि जब त्यस (नरक) मा सबै एकत्रित हुनेछन्,[2] त उनीमध्ये पछि आउनेहरू आफूभन्दा पहिलेका विषयमा भन्नेछन्[3] कि हे हाम्रो पालनकर्ता ! यिनीहरूले नै हामीलाई पथविचलित गरे, तिमी यिनीहरूलाई नरकको दोहोरो सजाँय देउ ।[4] (अल्लाह) ले भन्नेछ कि प्रत्येकको लागि दुई गुना छ,[5] तर तिमी जान्दैनौ ।

وَقَالَتْ أُولَىٰهُمْ لِأُخْرَىٰهُمْ فَمَا كَانَ لَكُمْ عَلَيْنَا مِن فَضْلٍ

(३९) पहिले आएकाले आफूभन्दा पछि आउनेहरूसित भन्नेछन् कि हामीमाथि तिम्रो कुनै प्रधानता छैन, अत:

---

[1] ﴿لَعَنَتْ أُخْتَهَا﴾ को अर्थ हो आफू समान अर्को गुटलाई धिक्कार्ने छ । “उख्त” अरबी भाषामा बहिनीलाई भन्दछन् । एक गिरोह (समुदाय) लाई अर्को गिरोह (समुदायको) बहिनी धर्मको आधारमा अथवा विचलनको कारण भनिएको छ । अर्थात् दुबै नै एक असत्य धर्मका अनुयायी थिए अथवा मार्ग-विचलित थिए अथवा नरकको साथी हुनुका कारण उनलाई एक-अर्काको बहिनी भनिएको छ ।

[2] (اداركوا) को अर्थ हो (تداركوا) जब एक-अर्कासित भेट्ने छन् तथा एकत्रित हुनेछन् ।

[3] (أخرى) (पछिल्ला) सित तात्पर्य पछि प्रवेश गर्नेहरू तथा (أولى) सित तात्पर्य उनीभन्दा पहिला प्रवेश गर्नेहरू हुन् । अथवा पछिल्लाबाट अनुकरण तथा पूर्वबाट नेतृत्व गर्नेहरू मुखियासित तात्पर्य छ । उनीहरूको अपराध अत्याधिक छ किनभने उनीहरू स्वयं सत्यमार्गबाट टाढा रहे तथा अरूहरूलाई पनि प्रयत्न गरेर टाढा राखे, यसकारण उनीहरू आफ्ना अनुसरण गर्नेहरूभन्दा पहिला नरकमा जानेछन् ।

[4] जसरी एक अर्को स्थानमा आदेश छ । नरकबासी भन्नेछन् ।

﴿رَبَّنَا إِنَّا أَطَعْنَا سَادَتَنَا وَكُبَرَآءَنَا فَأَضَلُّونَا السَّبِيلَا ☆ رَبَّنَا آتِهِمْ ضِعْفَيْنِ مِنَ الْعَذَابِ وَالْعَنْهُمْ لَعْنًا كَبِيرًا﴾

“हे हाम्रा प्रभु ! हामी त आफ्ना प्रमुख तथा पूर्वजहरूका अनुगामी हौं, अत: उनीहरूले हामीलाई सोझो मार्गबाट विचलित गरिदिए, हे मेरो प्रभु ! यिनीहरूलाई दुईगुना प्रकोप (यातना) देउ तथा उनीहरूलाई निकै धिक्कार गर ।” (सूर: अल-अहज़ाब-६७, ६८)

[5] अर्थात् अब एक-अर्कालाई धिक्कार्नु अथवा गाली गर्नुबाट कुनै लाभ छैन, तिमी सबै आ-आफ्ना ठाउँमा अपराधी थियौ, तिमी सबै दोब्बर दण्डको अधिकारी हौ । नेता तथा अनुगामीहरूको यो संवाद सूर: सबा ३१ तथा ३२ मा पनि वर्णन गरिएको छ ।

فَذُوقُوا الْعَذَابَ بِمَا كُنْتُمْ تَكْسِبُونَ ﴿٣٩﴾

तिमी पनि आफ्ना कर्महरूका कारण यातनाको स्वाद चाख ।

إِنَّ الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا وَاسْتَكْبَرُوا عَنْهَا لَا تُفَتَّحُ لَهُمْ أَبْوَابُ السَّمَاءِ وَلَا يَدْخُلُونَ الْجَنَّةَ حَتَّىٰ يَلِجَ الْجَمَلُ فِي سَمِّ الْخِيَاطِ ۚ وَكَذَٰلِكَ نَجْزِي الْمُجْرِمِينَ ﴿٤٠﴾

(४०) नि:सन्देह जसले हाम्रा आयतहरूलाई झुठ्लाए तथा उनीप्रति अहंकार गरे तिनका लागि आकाशको द्वार खोलिने छैनन्[1] तथा उनी स्वर्गमा प्रवेश पाउने छैनन् जबसम्म ऊँट सियोको प्वालबाट प्रवेश गर्दैन[2] तथा हामी पापीहरूलाई यसैप्रकार प्रतिकार दिन्छौं ।

لَهُمْ مِنْ جَهَنَّمَ مِهَادٌ وَمِنْ فَوْقِهِمْ غَوَاشٍ ۚ وَكَذَٰلِكَ نَجْزِي الظَّالِمِينَ ﴿٤١﴾

(४१) उनीहरूका लागि नरकको आगोको ओछ्यान हुनेछ तथा उनीहरूमाथि त्यसैको सिरक हुनेछ,[3] तथा हामी अत्याचारीहरूलाई यस्तै दण्ड दिन्छौं ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَا نُكَلِّفُ نَفْسًا إِلَّا وُسْعَهَا أُولَٰئِكَ أَصْحَابُ الْجَنَّةِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٤٢﴾

(४२) तथा जसले विश्वास एवं सदाचार गरे, हामी कसैमाथि उसको शक्ति अनुसार नै भार राख्दछौं,[4] यी नै स्वर्गीय हुन् यी नै त्यसमा सधैं बास गर्नेछन् ।

[1]यसको भावार्थ केही विद्वानहरूले कर्म, केहीले प्राण तथा केहीले विनय लिएका छन् अर्थात् उनका कर्म तथा प्राणहरू अथवा विनयका लागि आकाशको द्वार खोलिने छैनन् अर्थात् कर्म तथा विनय स्वीकार गरिन्न तथा प्राण धर्तीतिर फर्काइन्छन् जस्तो कि मुसनद अहमद भाग-२, पृष्ठ-३६४, ३६५) को एक हदीसबाट विदित हुन्छ । प्रकाण्ड विद्वान इमाम शौकानी भन्नुहुन्छ कि तीनटै भावार्थ लिन सकिन्छन् ।

[2]यो असम्भव कुरो छ । जुनप्रकार उँटलाई सियोको छिद्रबाट छिर्नु असम्भव छ त्यसैप्रकार काफ़िरहरूलाई स्वर्गमा प्रवेश असम्भव छ ।

[3](غواش) शब्द (غاشية) को बहुवचन हो, जसको अर्थ हो "ढाक्ने" अर्थात् आगो नै उनको सिरक हुनेछ अर्थात् माथिबाट पनि आगोले छोपिहाल्नेछ ।

[4]यो प्रासंगिक वाक्य हो जसको उद्देश्य यो भन्नु हो कि ईमान तथा सत्कर्म, यी यस्ता कुरा होइनन् जुन मनुष्यको शक्तिभन्दा अधिक छ तथा मनुष्य यिनलाई गर्ने शक्ति राख्दैन ।

(४३) तथा हामीले उनीहरूका हृदयमा भएको कपटको निवारण गरिदिनेछौं[१] उनीहरू मुनी नहरहरू बगिराखेका हुन्छन् । र उनीहरूले भन्नेछन्, अल्लाहकै लागि सबै प्रशंसा छ जसले हामीलाई यस दिशातिर मार्गदर्शन गऱ्यो । यदि उसले मार्गदर्शन नगरेको भए हामी स्वयं मार्गमा हुने थिएनौं ।[२] निःसन्देह हाम्रो

وَنَزَعْنَا مَا فِي صُدُورِهِم مِّنْ غِلٍّ تَجْرِي مِن تَحْتِهِمُ الْأَنْهَارُ ۖ وَقَالُوا الْحَمْدُ لِلَّهِ الَّذِي هَدَانَا لِهَٰذَا وَمَا كُنَّا لِنَهْتَدِيَ لَوْلَا أَنْ هَدَانَا اللَّهُ ۖ لَقَدْ جَاءَتْ رُسُلُ

बरू प्रत्येक मानिस सरलताले यिनलाई अपनाउन सक्दछ तथा यिनका आवश्यकता अथवा माँगलाई पूरा गर्न सक्दछ ।

[१](غل) त्यस ईर्ष्यालाई भन्दछन् जुन हृदयमा दबिएको हुन्छ । अल्लाह तआलाले स्वर्गमा भएकामाथि यो कृपा पनि गर्नेछ कि तिनका हृदय एक-अर्काका लागि दर्पण जस्तै सफा गरिदिनेछ, कसैको विषयमा कसैलाई कुनै द्वेष अथवा घृणा रहने छैन । केही ज्ञाताहरूले यसको अर्थ यो लगाएका छन् कि स्वर्गवालाहरूको बीच जुन पद तथा सम्मानको अन्तर हुनेछ, त्यस सम्बन्धमा एक-अर्कासित ईर्ष्या गर्ने छैनन् । पहिलो भावार्थको एक हदीसबाट पुष्टि हुन्छ कि स्वर्गमा भएकालाई स्वर्ग तथा नरकको मध्य पुलमा रोकिइनेछ तथा तिनका बीच आपसमा जुन कटुता हुन्छ, एक-अर्कालाई त्यसको परिणाम दिइनेछ । यहाँसम्मकि उनीहरू जब पूर्णरूपले शुद्ध एवं पवित्र हुन्छन् तब उनलाई स्वर्गमा प्रवेश गर्ने आज्ञा प्रदान गरिनेछ (सहीह बुख़ारी किताबुल मज़ालिम) जस्तै सहाबाको आपसी कटुता छ जुन राजनीतिक प्रतिद्वन्दताको कारण उत्पन्न भयो । आदरणीय अली (رضی الله عنه) को कथन छ, "मलाई आशा छ कि म, उस्मान तथा तल्हा एवं जुबैर ती मध्येका हुनेछौं जसको विषयमा अल्लाहको आदेश छ । ﴿وَنَزَعْنَا مَا فِي صُدُورِهِم مِّنْ غِلٍّ﴾ (इब्ने क़सीर)

[२]अर्थात यो मार्गदर्शन जसबाट हामीलाई ईमान तथा सत्कर्मको जीवन प्राप्त भयो तथा तिनलाई अल्लाहको दरबारमा स्वीकार गरिने सौभाग्य पनि प्राप्त भयो । यो अल्लाह तआलाको विशेष कृपा हो तथा त्यसको उपकार हो । यदि यो अल्लाहको कृपा तथा उपकार नभएको भए हामी यस स्थानसम्म पुग्न सक्ने थिएनौं । यसै भावार्थको यो हदीस पनि छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "यो कुरा राम्ररी जानिहाल कि तिमी मध्येबाट कसैको कर्म स्वर्गमा लगिने छैन, जबसम्मकि अल्लाह तआलाको कृपा पनि हुनेछैन ।" सहाबा (उनीसित अल्लाह प्रसन्न भयो) ले सोधे, "हे ईशदूत (तपाईंमाथि अल्लाहको कृपा तथा शान्ति होस्) तपाईं पनि ?" उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) ले भन्नुभयो, "हो, म पनि त्यसबेलासम्म स्वर्गमा जाने छैन जबसम्म ममाथि अल्लाहको कृपा हुनेछैन ।" (सहीह बुख़ारी किताबुल रिक़ाक़ बाबुल क़स्द वल मदावमः अलल अमल, सहीह मुस्लिम किताबु सिफ़ तुल क़ियामः बाब लन् यद्खुल अहदुन् जन्नः बे अमलेही ।

رَبِّنَا بِالْحَقِّ ؕ وَنُوْدُوْۤا اَنْ تِلْكُمُ الْجَنَّةُ اُوْرِثْتُمُوْهَا بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ۝٤٣

प्रभुका उपदेशक सत्य लिएर आए । तथा उनीसित घोषणा स्वरूप भनिनेछ कि आफ्ना कर्मको परिणाम स्वरूप तिमी यस स्वरका उत्तराधिकारी बनाइयौ ।[1]

وَنَادٰۤى اَصْحٰبُ الْجَنَّةِ اَصْحٰبَ النَّارِ اَنْ قَدْ وَجَدْنَا مَا وَعَدَنَا رَبُّنَا حَقًّا فَهَلْ وَجَدْتُّمْ مَّا وَعَدَ رَبُّكُمْ حَقًّا ؕ قَالُوْا نَعَمْ ۚ فَاَذَّنَ مُؤَذِّنٌۢ بَيْنَهُمْ اَنْ لَّعْنَةُ اللّٰهِ عَلَى الظّٰلِمِيْنَ ۝٤٤ۙ

(४४) तथा स्वर्गवासी नरकवासीहरूलाई पुकार्नेछन् कि हामीले आफ्नो परमेश्वरको वचनलाई जुन हामीलाई दिइएको थियो सत्य पायौं त के तिमीसित तिम्रो परमेश्वरले जुन वाचा गरेको थियो, तिमिले पनि सत्य पायौ ?[2] उनीहरूले भन्नेछन्, “हो”, अनि एउटा उद्घोषकले उनीहरूको माभमा पुकार्नेछ कि अल्लाहको धिक्कार छ अत्याचारीहरूमाथि

الَّذِيْنَ يَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ وَيَبْغُوْنَهَا عِوَجًا ۚ وَهُمْ بِالْاٰخِرَةِ كٰفِرُوْنَ ۝٤٥ۘ

(४५) जो आफ्नो परमेश्वरको मार्गबाट रोक्न् र त्यसलाई बाङ्गोटिङ्गो (बक्र) बनाउन चाहन्छन् तथा उनी परलोकलाई पनि नकार्दछन् ।

وَبَيْنَهُمَا حِجَابٌ ۚ وَعَلَى الْاَعْرَافِ

(४६) तथा ती दुबैका बीच एउटा पर्दा हुनेछ ।[3]

[1]यो व्याख्या पछिल्लो कुरो तथा वर्णित हदीसको विपरीत छैन । यसकारण कि पुण्यको सौभाग्य पनि स्वयं अल्लाहको उपकार तथा कृपा हो ।

[2]यही कुरो नबी सल्लल्लाहु अलैहि वसल्लमले बद्रको अवसरमा जब काफिरहरू मारिए तथा तिनका शव एक इनारमा फालिए उनीहरूलाई सम्बोधित गर्दै भन्नुभयो, जसमा आदरणीय उमर (رضي الله عنه) ले भन्नुभयो, “तपाईं यस्तालाई सम्बोधित गरिराख्नु भएको छ जो मरिसकेका छन् ।” उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, “अल्लाहको सौगन्ध, म उनीहरूलाई जे-जति भनिराखेको छु, उनीहरू तिमीभन्दा अधिक सुनिराखेका छन्, तर अब उनीहरूमा उत्तर दिने शक्ति छैन ।” (बुख़ारी किताबुल मग़ाजी बाब कत्ले अबी जहल, सहीह मुस्लिम किताबुल जन्नः, बाब अरदे मक़अदिल मय्यित मिनल जन्नते अविन्नारे तथा )

[3]“यी दुबैका मध्य” सित तात्पर्य स्वर्ग, नरकका बीच अथवा ईमान भएका तथा क़ाफिरहरूका बीच हो । हिज़ाबुन (حجاب) (अदृश्य अथवा पट) सित पर्खाल तात्पर्य छ जसको वर्णन सूरः हदीदमा छ । ﴿فَضُرِبَ بَيْنَهُمْ بِسُوْرٍ لَّهٗ بَابٌ﴾

رِجَالٌ يَّعۡرِفُوۡنَ كُلًّاۢ بِسِيۡمٰهُمۡ‌ۚ وَنَادَوۡا اَصۡحٰبَ الۡجَـنَّةِ اَنۡ سَلٰمٌ عَلَيۡكُمۡ‌ لَمۡ يَدۡخُلُوۡهَا وَهُمۡ يَطۡمَعُوۡنَ ‏﴿۴۶﴾‏

एवं "आराफ़" (उचाई) मा केही पुरूष हुनेछन्[1] जो प्रत्येकलाई उनका लक्षणहरूबाट चिनिहाल्नेछन्,[2] तथा स्वर्गवासीहरूलाई पुकार्ने छन् कि तिमीमाथि शान्ति होस्, उनीहरू त्यस (स्वर्ग) मा प्रवेश पाएका हुने छैनन् तथा त्यसको आशा राखेका हुन्छन् ।[3]

وَاِذَا صُرِفَتۡ اَبۡصَارُهُمۡ تِلۡقَآءَ اَصۡحٰبِ النَّارِۙ قَالُوۡا رَبَّنَا لَا تَجۡعَلۡنَا مَعَ الۡقَوۡمِ الظّٰلِمِيۡنَ ‏﴿۴۷﴾‏

(४७) तथा जब तिनका आखा नरकवासीहरूमा पर्छन् तब भन्नेछन् कि हाम्रो परमेश्वर हामीलाई अत्याचारीहरूको साथमा सम्मिलित नगर्नु ।

وَنَادٰٓى اَصۡحٰبُ الۡاَعۡرَافِ رِجَالًا يَّعۡرِفُوۡنَهُمۡ بِسِيۡمٰهُمۡ قَالُوۡا مَاۤ اَغۡنٰى عَنۡكُمۡ جَمۡعُكُمۡ وَمَا كُنۡتُمۡ تَسۡتَكۡبِرُوۡنَ ‏﴿۴۸﴾‏

(४८) तथा अअ्राफ़मा भएकाले केहीलाई जसलाई उनका लक्षणहरूबाट चिनेका हुनेछन् पुकार्नेछन् कि तिम्रो भीड एवं अहंकार तिम्रो कुनै काम आएन ।[4]

---

"त उनीहरूको मध्येमा एउटा पर्खाल खडा गरिने छ, जसमा एउटा द्वार हुनेछ ।" (सूर: अल-हदीद-१३) यही "आराफ" को पर्खाल हो ।

[1]यी को हुनेछन् ? तिनको निर्धारणको सम्बन्धमा व्याख्याकारहरूमा अत्यन्त मतभेद छ। अधिकतर व्याख्याकारहरूको विचार छ कि यी त्यस्ता हुनेछन् जसका पुण्य तथा पाप समान हुनेछन्। तिनका पुण्य नरकमा जानबाट तथा पाप स्वर्गमा जानबाट रोक्नेछन् तथा यसप्रकार अल्लाहको तर्फबाट अन्तिम निर्णय हुन्जेलसम्म त्यही अवस्थामा रहनेछन् ।

[2](سيماء) (सीमाअ) को अर्थ चिन्ह हो । स्वर्गमा भएकाहरूको मुख प्रकाशको ज्योतिले उज्जवल हुनेछन् तथा कसैमाथि थकाईको चिन्ह हुने छैन एवं नरकमा भएकाहरूको मुख कालो तथा आँखा निलो हुनेछ । यसप्रकार यी दुबै प्रकारका मानिसहरूका मुख चिन्हहरूबाट पहिचान गरिनेछन् ।

[3]यहाँ (يطمعون) (यतमअुन) को अर्थ केही ज्ञाताहरूले (यअलमून) गरेका छन् अर्थात् उनलाई ज्ञान हुनेछ कि उनी निकटमै छिट्टै स्वर्गमा प्रवेश पाउने छन् ।

[4]यी नरकवासी हुनेछन् जसलाई आराफ़वालाले उनका चिन्हहरूबाट चिनिहाल्ने छन् तथा उनी आफ्ना गुट तथा श्रेष्ठतामा जुन घमण्ड गर्दथे, त्यसको उदाहरण दिएर उनीहरूलाई स्मरण गराउँछन् कि यी कुराहरू तिम्रो कुनै काम आउने छैनन् ।

أَهَٰٓؤُلَآءِ ٱلَّذِينَ أَقۡسَمۡتُمۡ لَا يَنَالُهُمُ ٱللَّهُ بِرَحۡمَةٍۚ ٱدۡخُلُواْ ٱلۡجَنَّةَ لَا خَوۡفٌ عَلَيۡكُمۡ وَلَآ أَنتُمۡ تَحۡزَنُونَ ٤٩

(४९) के यी नै हुन् जसको विषयमा तिमीले बलपूर्वक शपथ लिंदै थियौ कि यिनी (स्वर्गवासीहरू) माथि अल्लाहको कृपा[1] हुनेछैन (उनीसित भनिनेछ) कि स्वर्गमा प्रवेश गरिहाल तिमीलाई कुनै भय छैन र न तिमी शोकाकुल हुनेछौ ।

وَنَادَىٰٓ أَصۡحَٰبُ ٱلنَّارِ أَصۡحَٰبَ ٱلۡجَنَّةِ أَنۡ أَفِيضُواْ عَلَيۡنَا مِنَ ٱلۡمَآءِ أَوۡ مِمَّا رَزَقَكُمُ ٱللَّهُۚ قَالُوٓاْ إِنَّ ٱللَّهَ حَرَّمَهُمَا عَلَى ٱلۡكَٰفِرِينَ ٥٠

(५०) तथा नरकमा भएकाले स्वर्गमा भएकाहरूलाई पुकार्ने छन् कि हामीमाथि केही पानी हालिदेउ अथवा ती कुरा मध्येबाट केही देउ उनीहरूले भन्नेछन् कि अल्लाहले दुबै विश्वासहीनहरूका लागि निषेध गरिसकेको छ ।[2]

ٱلَّذِينَ ٱتَّخَذُواْ دِينَهُمۡ لَهۡوٗا وَلَعِبٗا وَغَرَّتۡهُمُ ٱلۡحَيَوٰةُ ٱلدُّنۡيَاۚ فَٱلۡيَوۡمَ نَنسَىٰهُمۡ كَمَا نَسُواْ لِقَآءَ

(५१) जसले आफ्नो धर्मलाई मनोरञ्जन एवं खेल बनाएका थिए तथा भौतिक जीवनले जसलाई धोका दियो, त आज हामी पनि उनीहरूलाई बिर्सिदिनेछौं ।[3]

[1]यसबाट तात्पर्य निष्ठावान हुन् जो संसारमा निर्धन, कंगाल, असहाय तथा कमजोर प्रकारका मानिस थिए, जसको उपहास वर्णित घमण्डीहरूले गर्ने गर्दथे तथा भन्थे कि यदि यिनी अल्लाहका प्रिय भएका भए संसारमा यिनको यही दशा हुन्थ्यो ? त्यसको उपरान्त अझै दुस्साहस गरी दाबी गर्दथे कि क्यामतका दिन अल्लाहको कृपा हामीमाथि हुनेछ (जुन प्रकारले संसारमा भइराखेको छ) न कि यिनीमाथि । केही व्याख्याकारहरूले यस कथनलाई आराफवालाको मुखसित लिएका छन् । तथा केही व्याख्याकार भन्दछन् कि जब आराफवालाले नरकवालालाई यो भन्नेछ, "तिम्रो गुट तथा तिमीले आफूलाई श्रेष्ठ ठान्ने कुरो तिम्रो कुनै काम आएन ।" त्यतिखेर अल्लाहको तर्फबाट स्वर्गवालाहरूतिर संकेत गर्दै भनिनेछ, "यी तिनै मानिसहरू हुन् जसका विषयमा तिमी पटक-पटक सौगन्ध खाएर भन्थ्यौ कि यिनीहरूमाथि अल्लाहको कृपा हुनेछैन । (तफ़सीर इब्ने क़सीर)

[2]जस्तो अघि चर्चा भइसकेको छ कि खाने-पिउने कुराको सुख-सुविधाहरू केयामतका दिन केवल निष्ठावानहरूलाई हुनेछ । (﴿خَالِصَةً يَوۡمَ ٱلۡقِيَٰمَةِ﴾) (आयत संख्या-३२) यहाँ यसको अधिक स्पष्टीकरण स्वर्गवालाहरूको मुखबाट गराइएको छ ।

[3]हदीसमा वर्णित छ, कि केयामतका दिन अल्लाह तआला आफ्ना यसप्रकारका भक्तसित भन्नेछ, "के मैले तिमीलाई पत्नी तथा सन्तान प्रदान गरेको थिइन ? तिमीलाई मान सम्मानबाट विभूषित गरेको थिइन ? के ऊँट-घोडाहरू तिम्रो सेवाको लागि प्रदान गरेको थिइन ? तथा के तिमी नेतृत्व गर्दाखेरि

يَوْمِهِمْ هَٰذَا ۙ وَمَا كَانُوا بِآيَاتِنَا يَجْحَدُونَ ﴿٥١﴾

जसरी उनीहरू यस दिनलाई बिर्सिदिए तथा हाम्रा आयतहरूलाई अस्वीकार गरिरहे ।

وَلَقَدْ جِئْنَاهُم بِكِتَابٍ فَصَّلْنَاهُ عَلَىٰ عِلْمٍ هُدًى وَرَحْمَةً لِّقَوْمٍ يُؤْمِنُونَ ﴿٥٢﴾

(५२) तथा हामीले उनको पासमा ज्ञानमा आधारित एक शास्त्र सविस्तार विवरणका साथ पठाइदिएका छौं,[1] जुन मार्गदर्शन एवं दया हो उनीहरूका लागि जो विश्वास गर्दछन्।

هَلْ يَنظُرُونَ إِلَّا تَأْوِيلَهُ ۚ يَوْمَ يَأْتِي تَأْوِيلُهُ يَقُولُ الَّذِينَ نَسُوهُ مِن قَبْلُ قَدْ جَاءَتْ رُسُلُ

(५३) के उनीहरू यसैको अन्तिम परिणामको प्रतीक्षा गरिराखेका छन् ?[2] जुन दिन यसको अन्तिम परिणाम आउने छ, त जसले यस

मानिसहरूबाट कर लिदैनथ्यौ ? त्यसले भन्नेछ, किन होइन ? हे अल्लाह ! यी सबै कुरा सत्य हुन् । अल्लाह तआला उसित सोध्नेछ, के तिमी मसित साक्षातकारको कुरोमा विश्वास गर्दथ्यौ ? त्यसले भन्नेछ होइन। अल्लाह तआलाको आदेश हुनेछ, "जुन प्रकार तिमीले मलाई बिर्सिरहयौ, तिमीलाई आज म बिर्सिदिन्छु ।" (सहीह मुस्लिम किताबुल जुहद) । कुर्आन करीमको यस आयतबाट यो पनि ज्ञान हुन्छ कि धर्मलाई खेलकूद बनाउने मानिस ती नै हुन्छन् जो सांसारिक छलमा लीन हुन्छन्। यस्ता मानिसहरूका हृदयबाट आखिरतको चिन्ता तथा अल्लाहको भय समाप्त हुन्छ । यसकारण उनी धर्ममा पनि आफ्नो तर्फबाट जे चाहन्छन्, थप्छन् तथा धर्मको जुन भागलाई चाहन्छन् कर्म शून्य गरिदिन्छन् अथवा तिनलाई खेलकूदको रूप दिन्छन्।

[1]यो अल्लाह तआला नरकवालाहरूको विषयमा नै भनिराखेको छ कि हामीले पूर्ण ज्ञानको आधारमा यस्तो किताब पठाएका थियौं, जसमा प्रत्येक कुरो स्पष्ट गरी वर्णन गरेका थियौं। उनीहरूले यसबाट लाभ लिन सकेनन् भने, त उनको दूर्भाग्य, नत्र जसले यसमा विश्वास गरे, तिनीहरू मार्गदर्शन तथा अल्लाहको कृपाबाट लाभान्वित भए । अर्थात् हामीले त

﴿ وَمَا كُنَّا مُعَذِّبِينَ حَتَّىٰ نَبْعَثَ رَسُولًا ﴾

"जबसम्म हामीले रसूल पठाएर सबै तर्क पूर्ण गर्दैनौं, तबसम्म हामी यातना दिंदैनौं ।" (सूरः बनी इस्राईल-१५) का अनुसार प्रबन्ध गरिदिएका थियौं ।

[2]तावीलको अर्थ हो कुनै वस्तुको वास्तविकता तथा परिणाम । अर्थात् अल्लाहको किताबद्वारा वाचा तथा चेतावनी तथा स्वर्ग-नरक आदिको वर्णन गरिदिएका थियौं तर यिनीहरू त्यस संसारको परिणाम आफ्नो आँखाले हेर्ने कुरोको प्रतीक्षामा थिए, त अब त्यो परिणाम उनको समक्ष आइपुग्यो ।

رَبِّنَا بِالْحَقِّ ۚ فَهَل لَّنَا مِن شُفَعَاءَ فَيَشْفَعُوا لَنَا أَوْ نُرَدُّ فَنَعْمَلَ غَيْرَ الَّذِي كُنَّا نَعْمَلُ ۚ قَدْ خَسِرُوا أَنفُسَهُمْ وَضَلَّ عَنْهُم مَّا كَانُوا يَفْتَرُونَ ﴿٥٣﴾

भन्दा पूर्व त्यसलाई बिर्सिसकेका थिए उनीहरू भन्नेछन् कि हाम्रो परमेश्वरका उपदेशक सत्य लिएर आएका थिए, तसर्थ के कोही हाम्रो सिफारिशी छ, जसले हाम्रो लागि सिफारिश गरिदेऊन, अथवा हामीलाई पुन: (संसारमा) पठाइन्थ्यौं भने त्यसका बाहेक कर्म गर्दथ्यौं जुन गरिराखेका थियौं ? उनीहरूले स्वयंलाई नोक्सानीमा पारिदिए तथा जुन भूठा कुरा रच्दथे, उनीबाट गुमिए ।[1]

إِنَّ رَبَّكُمُ اللَّهُ الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ فِي سِتَّةِ أَيَّامٍ ثُمَّ اسْتَوَىٰ عَلَى الْعَرْشِ يُغْشِي

(५४) नि:सन्देह तिम्रो पोषक अल्लाह नै हो जसले आकाशहरू तथा धर्तीलाई ६ दिनमा रचना गऱ्यो,[2] तथा पछि अर्श (सिंहासन) मा आसीन

[1]अर्थात् यिनी जुन परिणामका प्रतीक्षामा थिए, उनीहरूका समक्ष आइहाले पश्चात सत्यतालाई स्वीकार गर्ने अथवा पुन: संसारमा पठाइने इच्छा तथा अन्य कुनै सिफारिश गर्नेको खोज, यो सबै बेकार हुनेछ । ती ईष्टदेव पनि यिनीबाट लुप्त हुनेछन्, जसका उनीहरूले अल्लाहलाई छाडि उपासना गर्दथे । उनीहरू न तिनका सहायता गर्नसक्ने छन्, न सिफारिश तथा न नरकको यातनाबाट मुक्त गराउन सक्नेछन् ।

[2]यी ६ दिन रविवार, सोमबार, मंगलबार, बुधबार, वृहस्पतिबार तथा शुक्रबार हुन् । शुक्रबारको दिननै आदरणीय आदमलाई पैदा गरियो । भनिन्छ कि शनिबारका दिन केही पनि पैदा गरिएन, यसैकारण यसलाई अरबी भाषामा योमुस सब्त भनिन्छ । किनभने सब्तको शब्दार्थ 'काट्नु' हो अर्थात त्यसदिन सृष्टिको कार्य समाप्त गरियो । अनि त्यसदिनसित के तात्पर्य छ ? हाम्रा संसारिक दिन, जुन सूर्योदयदेखि प्रारम्भ भएर सूर्यास्तमा समाप्त हुन्छ । अथवा यो दिन हजार वर्षहरूको समान छ ? जुनप्रकार अल्लाहकहाँ दिनको गणना छ, अथवा जुन प्रकारले केयामतको दिनको विषयमा चर्चा । स्वभाविक रूपले दोस्रो कुरो अधिक उचित प्रतीत हुन्छ । किनभने त्यस समयसम्म त सूर्य तथा चन्द्रमाको यो नियम नै थिएन, आकाश तथा धर्तीको सृष्टि पश्चात नै यो नियम प्रारम्भ भयो । अर्को कुरो यो कि परलोकको कुरा हो, जसको संसार अर्थात यस लोकसित कुनै सम्बन्ध छैन । यसकारण यस दिनको वास्तविकता त अल्लाह नै जान्दछ । हामी दृढतापूर्वक कुनै कुरो भन्न सक्तैनौं । किनभने यसको अतिरिक्त अल्लाह तआलालाई त अरबी भाषाको शब्द 'कुन' (كن) भन्नु नै पर्याप्त छ तथा त्यो भइहाल्छ, यसका अतिरिक्त उसले प्रत्येक वस्तुलाई विभिन्न प्रकारले उत्पन्न गरेको छ, यसको पनि वास्तविकता अल्लाह तआला नै जान्दछ, तैपनि केही आलिमहरूले त्यसको एउटा बुद्धिमत्ता मानिसहरूलाई सुविधा सम्मान तथा क्रमिकरूपले काम गर्ने शिक्षा दिनु भनेका छन् । (والله أعلم)

اَلَّيْلَ النَّهَارَ يَطْلُبُهٗ حَثِيْثًا ۙ وَّالشَّمْسَ وَالْقَمَرَ وَالنُّجُوْمَ مُسَخَّرٰتٍۭ بِاَمْرِهٖ ؕ اَلَا لَهُ الْخَلْقُ وَالْاَمْرُ ؕ تَبٰرَكَ اللّٰهُ رَبُّ الْعٰلَمِيْنَ ۝٥٤

भयो,[१] त्यसले रात्रिलाई दिनबाट यसरी लुकाइदिन्छ, कि त्यो त्यसलाई तीब्र गतिले आइपुग्छ[२] तथा सूर्य एवं चन्द्रमा तथा ताराहरूको रचना गऱ्यो ताकि तिनीहरू त्यसको आदेशमा काम लागुन्। सावधान रह, उसैको सृष्टि र उसैको आदेश छ। अल्लाह सर्वलोकको पोषक अति शुभ छ।

اُدْعُوْا رَبَّكُمْ تَضَرُّعًا وَّخُفْيَةً ؕ اِنَّهٗ لَا يُحِبُّ الْمُعْتَدِيْنَ ۝٥٥

(५५) आफ्नो परमेश्वरलाई नम्रतापूर्वक एवं सुस्तरी पुकार, निश्चय नै त्यसले अतिक्रमण गर्नेहरूलाई माया गर्दैन।

وَلَا تُفْسِدُوْا فِي الْاَرْضِ بَعْدَ اِصْلَاحِهَا وَادْعُوْهُ خَوْفًا وَّطَمَعًا ؕ اِنَّ رَحْمَتَ اللّٰهِ

(५६) तथा धर्तीमा सुधार पश्चात बिगाड उत्पन्न नगर एवं भय तथा आशाका साथ

[१](استواء) (इस्तेवा) को अर्थ हो 'उच्च' तथा 'स्थिर' हुनु तथा सलफ़ (पूर्वज) ले बिना कुनै भौतिक संरचना तथा बिना कुनै तुलना यही अर्थ लिएका छन्। अर्थात् अल्लाह तआला अर्शमा उच्च तथा स्थिर छ। तर कुन प्रकारले, कुन स्थितिमा, यसलाई हामी वर्णन गर्न सक्दैनौं न कुनै प्रकारको तुलना अथवा उपमा नै प्रस्तुत गर्न सक्दछौं नुईम बिन हम्मादको कथन छ, "जसले पनि अल्लाहको तुलना अथवा उपमा कुनै सृष्टिसित गऱ्यो उसले पनि कुफ्र गऱ्यो तथा जसले अल्लाहको, आफ्नो विषयमा वर्णित कुरोलाई इन्कार गऱ्यो त्यसले पनि कुफ्र गऱ्यो।" तथा अल्लाहको विषयमा त्यसको अथवा त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लमद्वारा वर्णन गरिएको कुरोलाई वर्णन गर्नु उपमा होइन। यसकारण जुन कुरा अल्लाह तआलाका विषयमा धार्मिक नियमहरूमा वर्णन पाईन्छ तथा तिनको पुष्टि हुन्छ तिनीमाथि बिना कुनै तर्क तथा बिना कुनै स्थिति तथा बिना उपमा विश्वास गर्नु आवश्यक छ। (इब्ने कसीर)

[२](حثيثا) (हषीषण) को अर्थ हो अति तीब्र गतिले। तथा अर्थ यो हो कि एकको पछाडि अर्को तुरून्त आइ पुग्छ। अर्थात् दिनको प्रकाश आउँछ त रातीको अँध्यारा शीघ्र नै समाप्त हुन्छ तथा रात्रि आउँछ त दिनको प्रकाश समाप्त हुन्छ तथा टाढा तथा निकट अँध्यारो छाईहाल्छ।

قَرِيبٌ مِّنَ الْمُحْسِنِينَ ۝٥٦

त्यसको आराधना गर, निश्चय अल्लाहको दया सदाचारीहरूबाट निकट छ।[1]

وَهُوَ الَّذِي يُرْسِلُ الرِّيَاحَ بُشْرًا بَيْنَ يَدَيْ رَحْمَتِهِ ۖ حَتَّىٰ إِذَا أَقَلَّتْ سَحَابًا ثِقَالًا سُقْنَاهُ لِبَلَدٍ مَّيِّتٍ فَأَنزَلْنَا بِهِ الْمَاءَ فَأَخْرَجْنَا بِهِ مِن كُلِّ الثَّمَرَاتِ ۚ كَذَٰلِكَ نُخْرِجُ الْمَوْتَىٰ لَعَلَّكُمْ تَذَكَّرُونَ ۝٥٧

(५७) र त्यही अल्लाह हो जो आफ्नो दयाले पूर्व शुभ सूचना[2] का लागि बतासहरू पठाउँछ यहाँसम्मकि जब उनी गह्रुङ्गो बादलहरूलाई बोकेर ल्याउँछन्[3] त हामीले तिनलाई कुनै सुकेको धर्तीतिर संचालित गरिदिन्छौं अनि त्यसबाट पानी वर्षाउँछन् पछि त्यसबाट प्रत्येक प्रकारका फल निकाल्छौं।[4] हामी यसैप्रकार मृतकहरूलाई निकाल्नेछौं ताकि तिमी विचार गर।[5]

[1]यी आयतहरूमा चारवटा कुराहरूको शिक्षा दिइएको छ: (१) अल्लाह (परमेश्वर) सित रोएर एवं मसिनो स्वरमा विनय गरियोस्। जुन प्रकार हदीसमा वर्णित छ, "हे मानिसहरू! आफ्नो ज्यानमाथि दया गर (अर्थात मसिनो स्वरमा विनय गर) जसलाई पुकारिराखेका छौ, त्यो न वधिर छ न अनुपस्थित, त्यो तिम्रा प्रार्थनाहरू सुन्न सक्तछ तथा तिम्रो निकट छ।" (सहीह बुखारी प्रार्थना पुस्तक अध्याय घाटीमा उक्लिँदाको समय प्रार्थना, मुस्लिम स्वर्ग पुस्तक, मसिनो स्वरले जप गर्नुको प्रधानताको अध्याय) (२) प्रार्थनामा अधिकता नगरियोस् अर्थात् आफ्नो पद तथा शक्तिभन्दा अधिक प्रार्थना नगरियोस्। (३) सुधार पश्चात उपद्रव नफैलाइयोस् अर्थात् अल्लाहका आदेशहरूको अवहेलना गरेर उपद्रव फैलाउनमा भाग नलिइयोस्। (४) त्यसको प्रकोपको भय पनि हृदयमा होस् तथा त्यसको कृपाको आशा पनि। यसप्रकारले प्रार्थना गर्ने राम्रो व्यक्ति छन् भने कि अवश्य अल्लाहको कृपाको निकट छ।

[2]यसमा अल्लाह आफू पूज्य एवं पोषक हुनुको अन्य तर्क दिदैछ, अनि यसबाट पूनर्जीवित गर्नुको प्रमाण दिराखेको छ। यहाँ दयाबाट तात्पर्य वर्षा हो अर्थात् वर्षाभन्दा पहिला त्यो शीतल वायु चलाउँछ जुनकि वर्षाको शुभ सूचक हुन्छ।

[3]गह्रुङ्गो बादलबाट तात्पर्य जलले परिपूर्ण मेघ हो।

[4]प्रत्येक प्रकारका फल, जो रङ्ग तथा स्वाद तथा सुगन्धहरूमा तथा रूपरेखामा भिन्न हुन्छन्।

[5]जुन प्रकारले हामी वर्षा गरेर प्राय: मृत धर्तीमा जीवन उत्पन्न गरिदिन्छौं तथा त्यो विभिन्न प्रकारका अन्न तथा फल पैदा गर्दछ। त्यसैप्रकार केयामतको दिन सबै

(५८) तथा स्वच्छ धर्ती प्रचुरताले आफ्ना बिरूवाहरू उब्जाउँछ एवं नराम्रो (भूमि) अति कम उपज दिन्छ,[1] यसैप्रकार हामी लक्षणहरूलाई विभिन्न प्रकारले वर्णन गर्दछौं, ताकि तिमी कृतज्ञता प्रकट गर ।

وَالْبَلَدُ الطَّيِّبُ يَخْرُجُ نَبَاتُهُ بِإِذْنِ رَبِّهِ ۖ وَالَّذِي خَبُثَ لَا يَخْرُجُ إِلَّا نَكِدًا ۚ كَذَٰلِكَ نُصَرِّفُ الْآيَاتِ لِقَوْمٍ يَشْكُرُونَ ﴿٥٨﴾

(५९) हामीले नूह (अलैहिस्सलाम) लाई उनका समुदातिर पठायौं तथा उनले भने हे मेरा समुदायका मानिसहरू ! अल्लाहको उपासना गर, त्यसबाहेक

لَقَدْ أَرْسَلْنَا نُوحًا إِلَىٰ قَوْمِهِ فَقَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُمْ مِنْ إِلَٰهٍ غَيْرُهُ ۖ إِنِّي

मनुष्यहरूलाई जो माटोमा मिसिएर माटो भईसकेका हुनेछन्, हामी पूनर्जीवित गर्नेछौं तथा पछि उनको निर्णय गर्नेछौं ।

[1]यसको अतिरिक्त यो उदाहरण पनि हुनसक्छ। (البلد الطيب) सित तात्पर्य शीघ्र बुझ्नेहरू (البلد الخبيث) सित कुबुद्धि-भाषण तथा शिक्षा स्वीकार गर्ने हृदय तथा त्यसका विपरीत हृदय, निष्ठावानहरूको हृदय तथा अवसरवादीहरूको हृदय अथवा पवित्र मनुष्य तथा अपवित्र मनुष्य । ईमान भएका, पवित्र मनुष्य तथा भाषण एवं शिक्षा ग्रहण गर्ने हृदय वर्षालाई स्वीकार गर्ने धर्ती समान छन्, जो अल्लाहका मन्त्रहरूलाई सुनेर विश्वास गर्दछन् तथा पुण्य कार्य गर्नमा अझै दृढ हुन्छन् तथा अर्को हृदय यसको विपरीत जुन बाँझो भूमिको समान छ जुन वर्षाको पानी स्वीकार गर्दैन अथवा स्वीकार गर्दछ भने अलिकति त्यसबाट उब्जनीको कमी हुन्छ । यसलाई हदीसमा यसप्रकार वर्णन गरिएको छ जुन रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले वर्णन गर्नुभएको छ, "तपाईं अल्लाह तआलाले जुन ज्ञान तथा निर्देशन दिएर पठाउनु भएको छ, त्यसको उदाहरण यस मुसलधारे वर्षाको समान छ जुन धर्तीमा पर्दछ। त्यसका जुन भाग उब्जाउ थिए, तिनीहरूले पानीलाई आफूमा सोसेर घाँसपात निकै उमार्‍यो (अर्थात् निकै उब्जनी दियो), त्यसका केही भाग कठोर थिए जसले पानी त रोके (भित्रसम्म सोसेन) त्यसबाट अन्यले लाभ उठाए, स्वयं पानी पिए तथा खेतहरूको सिंचाई पनि गरे तथा कृषि गरे । तथा धर्तीको केही भाग बिल्कुलै बाँझो थियो जसले न पानीलाई रोके तथा न केही उब्जाए । तसर्थ यो त्यस व्यक्तिको उदाहरण हो जसले अल्लाहको धर्ममा केही ज्ञान प्राप्त गर्‍यो तथा अल्लाहले मलाई जुन कुरोसँग पठायो, जसबाट त्यसले लाभ उठायो, तथा स्वयं पनि ज्ञान प्राप्त गर्‍यो तथा अरूहरूलाई पनि सिकायो तथा उदाहरण त्यस व्यक्तिको पनि हो जसले न त केही सिक्यो न त मार्गदर्शन नै स्वीकार गर्‍यो जेसित मलाई पठाइयो ।" (सहीह बुख़ारी किताबुल इल्म बाब फज़्ले मन अलेम व अल्लम)

أَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿٥٩﴾

कोही तिम्रो उपास्य छैन, निःसन्देह म तिमीमाथि एउटा ठूलो दिनको यातनाबाट तर्सन्छु ।

قَالَ الْمَلَأُ مِن قَوْمِهِ إِنَّا لَنَرَاكَ فِي ضَلَالٍ مُّبِينٍ ﴿٦٠﴾

(६०) उनका समुदायका प्रमुखहरूले भने हामी तपाईंलाई खुलारूपले मार्ग-विचलनमा परेको देखिराखेका छौं ।[1]

قَالَ يَا قَوْمِ لَيْسَ بِي ضَلَالَةٌ وَلَٰكِنِّي رَسُولٌ مِّن رَّبِّ الْعَالَمِينَ ﴿٦١﴾

(६१) उनले भने हे मेरा समुदायका मानिसहरू ! म विपथ होइन बरू विश्वको पोषकको प्रतिनिधि हूँ ।

أُبَلِّغُكُمْ رِسَالَاتِ رَبِّي وَأَنصَحُ لَكُمْ وَأَعْلَمُ مِنَ اللَّهِ مَا لَا تَعْلَمُونَ ﴿٦٢﴾

(६२) तिमीलाई तिम्रो स्वामीको सन्देश पुऱ्याउँछु तथा तिम्रो भलो गरिराखेको छु तथा अल्लाहको तर्फबाट त्यो ज्ञान राख्दछु जुन कुरोको ज्ञान तिमीलाई छैन ।

أَوَعَجِبْتُمْ أَن جَاءَكُمْ ذِكْرٌ مِّن رَّبِّكُمْ عَلَىٰ رَجُلٍ مِّنكُمْ لِيُنذِرَكُمْ وَلِتَتَّقُوا وَلَعَلَّكُمْ تُرْحَمُونَ ﴿٦٣﴾

(६३) के तिमीलाई आश्चर्य छ कि तिम्रो पोषकको तर्फबाट तिम्रो समुदायको एउटा पुरूषमाथि कुनै आदेशको कुरा आएको छ ताकि तिमीलाई सचेत गरोस्, तथा तिमी संयम अपनाउ[2] तथा ताकि तिमीमाथि दया गरियोस् ।

[1]शिर्क (अर्थात् मिश्रणवाद) मानव विवेक विचारलाई यस्तो विकारग्रस्त गरिदिन्छ कि त्यसले सत्मार्गलाई कुमार्ग तथा कुमार्गलाई सत्मार्ग ठान्न थाल्छ । ईशदूत नूहको समुदायमा पनि यो भ्रम उत्पन्न भयो । ईशदूत नूह जो उनीहरूलाई एकेश्वरवादतिर आह्वान गरिराखेका थिए (परमेश्वरको शरण) त्यो तिनीहरूलाई विपथ देखिदैं थियो ।

[2]ईशदूत नूह (जल पलावन मनु) तथा आदम (आदिमनु) का बीच दस पुस्ताहरूको अन्तर छ । आदरणीय नूहदेखि केही पहिलासम्म सबै इस्लाम धर्मका अनुयायी भई आइराखेका थिए पछि, सर्वप्रथम एकेश्वरवादबाट विमुखता यस्तो आयो कि यस वर्गका पुनीत मानिसहरूको निधन भयो त उनका श्रद्धालुहरूले उनीमाथि पूजा स्थल वनाए तथा त्यहाँ तिनका चित्र पनि झुण्ड्याइदिए जसको उद्देश्य यो थियो कि यसप्रकार उनको स्मरणबाट उनीहरू पनि अल्लाहको उपासना गर्नेछन् । केही समय व्यतीत भए पश्चात उनीहरूले यी चित्रहरूका मूर्ति बनाए अनि केही समय पश्चात यी मूर्तिहरू पूज्यको रूपमा आइहाले तथा तिनको पूजा हुनथाल्यो । नूहका समुदाका यी पाँच पुनीत वद्द, स्वाअ, यगूस, यऊक तथा नस्र देवता बने । यस्तो अवस्थामा

فَكَذَّبُوهُ فَأَنجَيْنَاهُ وَالَّذِينَ مَعَهُ فِي الْفُلْكِ وَأَغْرَقْنَا الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا ۚ إِنَّهُمْ كَانُوا قَوْمًا عَمِينَ ﴿٦٤﴾

(६४) तर उनीहरूले तिनलाई झुठ्लाइदिए अनि हामीले नूह तथा उनका अनुयायीहरूलाई नौका (डुङ्गा) मा बचायौं तथा जो हाम्रा आयत (निशानीहरू) मानेनन् उनीहरूलाई डुबाइदियौं । निश्चय उनी एउटा अन्धा वर्ग थिए ।[1]

وَإِلَىٰ عَادٍ أَخَاهُمْ هُودًا ۗ قَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ ۚ أَفَلَا تَتَّقُونَ ﴿٦٥﴾

(६५) तथा आदको पासमा उनका भाई (ईशदूत) हूदलाई पठायौं[2] उनले भने, हे मेरा समुदाय ! अल्लाहको आराधना गर, त्यसबाहेक तिम्रो कोही पूज्य छैन । त के तिमी तर्सन्नौ ?

قَالَ الْمَلَأُ الَّذِينَ كَفَرُوا مِن قَوْمِهِ إِنَّا لَنَرَاكَ فِي سَفَاهَةٍ وَإِنَّا لَنَظُنُّكَ مِنَ الْكَاذِبِينَ ﴿٦٦﴾

(६६) उनका समुदायका विश्वासहीन प्रमुखहरूले भने, हामीलाई तिमी मूर्ख लागिराखेका छौ,[3] वस्तुतः हामीले त तिमीलाई झूठा ठानिराखेका छौं ।

قَالَ يَا قَوْمِ لَيْسَ بِي سَفَاهَةٌ وَلَٰكِنِّي رَسُولٌ مِّن رَّبِّ الْعَالَمِينَ ﴿٦٧﴾

(६७) उनले भने, हे मेरा वर्गका मानिसहरू ! म बुद्धिहीनताले ग्रस्त होइन परन्तु म विश्वको पोषकको सन्देशवाहक हूँ ।

अल्लाहले आदरणीय नूहलाई तिनको सन्देशवाहक बनाएर पठायो जसले साढे नौसय वर्षसम्म उनीहरूलाई आमन्त्रण दिए । तर केही मानिसहरू बाहेक कसैमाथि उहाँको शिक्षाको प्रभाव परेन । अन्ततः निष्ठा गर्नेहरू बाहेक सबै जल प्रलयमा डुबाइए । यस आयतमा भनिंदैछ कि नूहको वर्गले यस कुरामा आश्चर्य व्यक्त गर्‍यो कि यिनै मध्येबाट एउटा व्यक्ति ईशदूत बनेर आयो जो उनीहरूलाई अल्लाहको प्रकोपबाट तर्साइरहेको छ । अर्थात उनको विचारले मानव ईशदूत बनाउन योग्य छैन ।

[1]अर्थात् सत्यबाट, सत्यलाई देख्दैनथे, न अपनाउनको लागि तयार थिए ।

[2]यो आद वर्ग प्रथम आद थियो जसको निवास यमनका पहाडहरू माथि थियो तथा आफ्नो बल एवं शक्तिमा अनुपम थियो । यिनीतिर उनैको जातिको एउटा व्यक्ति आदरणीय "हूद" ईशदूत बनेर आए ।

[3]उनको विचारमा उनका पूर्वजहरूका पूज्यलाई त्याग गरी अद्वैत तथा एउटैको पूजाको कुरा मूर्खता थियो ।

(६८) म तिमीलाई आफ्नो परमेश्वरको सन्देश पुऱ्याउँछु एवं तिम्रो ईमान्दार शुभचिन्तक हूँ।

أُبَلِّغُكُمْ رِسٰلٰتِ رَبِّيْ وَاَنَا لَكُمْ نَاصِحٌ اَمِيْنٌ ۝٦٨

(६९) के तिमीलाई आश्चर्य छ कि तिम्रो पोषकतिरबाट कुनै उपदेशको कुरा तिमीमध्येबाटै एउटा पुरूषको पासमा आएको छ ताकि त्यसले तिमीलाई सचेत गरोस्, तिमी स्मरण गर जबकि (अल्लाह) ले तिमीलाई नूहको वर्गको पश्चात उनको स्थानमा गरिदियो तथा तिम्रो आकृतिलाई अधिक विस्तार दियो,[1] अत: तिमी अल्लाहका अनुकम्पाहरूलाई याद गर ताकि सफल होऊ।

اَوَعَجِبْتُمْ اَنْ جَآءَكُمْ ذِكْرٌ مِّنْ رَّبِّكُمْ عَلٰى رَجُلٍ مِّنْكُمْ لِيُنْذِرَكُمْ ؕ وَاذْكُرُوْٓا اِذْ جَعَلَكُمْ خُلَفَآءَ مِنْۢ بَعْدِ قَوْمِ نُوْحٍ وَّزَادَكُمْ فِى الْخَلْقِ بَصْۜطَةً ۚ فَاذْكُرُوْٓا اٰلَآءَ اللّٰهِ لَعَلَّكُمْ تُفْلِحُوْنَ ۝٦٩

(७०) उनले भने कि के तिमी हाम्रो पासमा यसकारण आएका हौ कि हामी मात्र एक अल्लाहको पूजा गरौं तथा आफ्ना पूर्वजका पूज्यहरूलाई त्यागिदेऔं।[2] अत: तिमी जुन कुराको धम्की दिन्छौ त्यसलाई ल्याउ यदि तिमी सत्यवादी हौ भने।

قَالُوْٓا اَجِئْتَنَا لِنَعْبُدَ اللّٰهَ وَحْدَهٗ وَنَذَرَ مَا كَانَ يَعْبُدُ اٰبَآؤُنَا ۚ فَاْتِنَا بِمَا تَعِدُنَآ اِنْ كُنْتَ مِنَ الصّٰدِقِيْنَ ۝٧٠

[1]एक अन्य स्थानमा अल्लाह तआ़लाले यसको विषयमा वर्णन गरेको छ।

﴿الَّتِي لَمْ يُخْلَقْ مِثْلُهَا فِي الْبِلَادِ﴾

"यस जस्तो शक्ति भएको समुदाय कही पैदा गरिएन।" (सूर: अल-फज्र-८)

आफ्नो यस शक्तिको घमण्डमा आएर यो भने कि ﴿مَنْ أَشَدُّ مِنَّا قُوَّةً﴾ "हामीभन्दा अधिक शक्तिशाली को छ र?" अल्लाह तआ़लाको आदेश भयो, "जसले उनीहरूलाई पैदा गरेको छ, त्यो उनीहरूभन्दा शक्तिशाली छ।" (सूर: हा. मीम. सजदा:-१५)

[2]पूर्वजहरूको अनुकरण प्रत्येक समयमा पथ-विचलनको कारण रहिआएको छ। आदका समुदायका मानिसहरूले पनि यही तर्क प्रस्तुत गरे तथा मूर्तिपूजा छाडेर एकेश्वरवाद (तौहीद) को मार्ग अपनाउन तयार भएनन्। दूर्भाग्यले मुसलमानहरूमा आफ्ना पूर्वजहरूको अनुकरणको रोग सामान्य रूपमा छ।

قَالَ قَدْ وَقَعَ عَلَيْكُمْ مِّنْ رَّبِّكُمْ رِجْسٌ وَّغَضَبٌ ؕ اَتُجَادِلُوْنَنِيْ فِيْٓ اَسْمَآءٍ سَمَّيْتُمُوْهَآ اَنْتُمْ وَاٰبَآؤُكُمْ مَّا نَزَّلَ اللّٰهُ بِهَا مِنْ سُلْطٰنٍ ؕ فَانْتَظِرُوْٓا اِنِّيْ مَعَكُمْ مِّنَ الْمُنْتَظِرِيْنَ ۝

(७१) उनीहरूले भने कि तिम्रो पालनकर्ताबाट तिमीमाथि प्रकोप एवं क्रोध आइनैहाल्यो,[१] के तिमी म सित केही यस्ता नामहरूको विषयमा विवाद गर्दछौ[२] जुन तिमीले तथा तिम्रा पूर्वजहरूले राखेका छन्, जसको कुनै तर्क अल्लाहले पठाएको छैन । तिमी प्रतीक्षा गर हामी (पनि) तिमीसँग प्रतीक्षा गरिराखेका छौं ।

فَاَنْجَيْنٰهُ وَالَّذِيْنَ مَعَهٗ بِرَحْمَةٍ مِّنَّا وَقَطَعْنَا دَابِرَ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا وَمَا كَانُوْا مُؤْمِنِيْنَ ۝

(७२) त हामीले उसलाई तथा उसका अनुयायीहरूलाई आफ्नो दयाले बचायौं तथा तिनीहरूको जरा काटिदियौं जसले हाम्रा आयतहरूलाई झुठ्लाए एवं उनीहरू निष्ठावान थिएनन् ।[३]

وَاِلٰى ثَمُوْدَ اَخَاهُمْ صٰلِحًا ۘ قَالَ يٰقَوْمِ اعْبُدُوا اللّٰهَ مَا لَكُمْ مِّنْ اِلٰهٍ غَيْرُهٗ ؕ قَدْ جَآءَتْكُمْ بَيِّنَةٌ مِّنْ رَّبِّكُمْ ؕ هٰذِهٖ نَاقَةُ اللّٰهِ

(७३) तथा समुद्रतिर उनको भाई सालेहलाई (पठायौं) । उनले भने, हे मेरो वर्गका मानिसहरू ! अल्लाहको इबादत (पूजा) गर त्यसको अतिरिक्त तिम्रो कोही पूज्य छैन । तिम्रो पासमा तिम्रो पोषकको तर्फबाट प्रमाण आइपुग्यो । यो

[१](رجس) को अर्थ अपवित्रता हो, परन्तु यहाँ (रिज्स) (رجز) बाट परिवर्तित भएको हो जसको अर्थ प्रकोप हो, अनि यहाँ रिज्स खिन्नता तथा प्रकोपको अर्थमा छ । (इब्ने कसीर)

[२]यसवाट तात्पर्य ती नाम हुन् जुन उनीहरूले आफ्ना पूज्यहरूलाई नामकरण गरेका थिए जस्तै सदा, समूद, हबा आदि जस्तै नूहको कौमका पाँच देवताहरूको नामको चर्चा अल्लाहले पवित्र कुर्आनमा गरेको छ । जस्तै अरबका मूर्तिपूजकहरूका मूर्तिहरूका नाम लात, उज्जा, मनात तथा हुबल आदि थिए, जस्तै आधुनिक मिश्रणवादी आस्था एवं कर्महरूमा लीन मानिसहरूका नाम राखेका छन्, उदाहरणार्थ "दाता गंज बख्श", "खाजा गरीब नवाज़," "बाबा फरीद शकर गंज," "मुश्किल कुशा" आदि जसका पूज्य अथवा मुश्किल कुशा (संकट मोचन) हुनुको कुनै प्रमाण उनीसित छैन । साथै उक्त आस्था राख्नु ठूलो शिर्क (बहुईश्वरवाद) पनि हो जसलाई अल्लाहले क्षमा गर्नुहुन्न ।

[३]यस समुदायमाथि वायुहरूको प्रकोप आयो जुन निरन्तर सात दिन आठ रात्रि चलिरहयो तथा आदका मानिसहरूका शव जसलाई आफ्नो शक्तिमा ठूलो गर्व थियो, खजूरका खोक्रा वृक्षहरू जस्तै धर्तीमा लडेको देखिंदै थिए ।

لَكُمْ اٰيَةً فَذَرُوْهَا تَاْكُلْ فِيْٓ اَرْضِ اللّٰهِ وَلَا تَمَسُّوْهَا بِسُوْٓءٍ فَيَاْخُذَكُمْ عَذَابٌ اَلِيْمٌ ﴿٧٣﴾

अल्लाहको ऊँटनी तिम्रो लागि प्रमाण हो। त्यसलाई अल्लाहको धर्तीमा खानलाई छाडिदेउ, यसलाई दुःख दिन हात नलगाउनु अन्यथा तिमीलाई दुःखद यातनाले समातिहाल्नेछ।

وَاذْكُرُوْٓا اِذْ جَعَلَكُمْ خُلَفَآءَ مِنْۢ بَعْدِ عَادٍ وَّبَوَّاَكُمْ فِي الْاَرْضِ تَتَّخِذُوْنَ مِنْ سُهُوْلِهَا قُصُوْرًا وَّتَنْحِتُوْنَ الْجِبَالَ بُيُوْتًا ۚ فَاذْكُرُوْٓا اٰلَآءَ اللّٰهِ وَلَا تَعْثَوْا فِي الْاَرْضِ مُفْسِدِيْنَ ﴿٧٤﴾

(७४) तथा तिमी ती परिस्थितिहरूलाई स्मरण गर जब अल्लाहले तिमीलाई आद (वर्ग) पश्चात उत्तराधिकारी बनायो एवं धर्तीमा तिमीलाई निवास स्थान दियो, तिमी त्यसका समतल भूमिमा भवनहरूको निर्माण गर्दछौ।[1] तथा पर्वतहरूलाई काटेर घर बनाउँछौं।[2] त अल्लाहका अनुकम्पाहरूको स्मरण गर तथा धर्तीमा उपद्रव गर्दै नहिंड।[3]

قَالَ الْمَلَاُ الَّذِيْنَ اسْتَكْبَرُوْا مِنْ قَوْمِهٖ لِلَّذِيْنَ اسْتُضْعِفُوْا لِمَنْ اٰمَنَ مِنْهُمْ اَتَعْلَمُوْنَ اَنَّ صٰلِحًا مُّرْسَلٌ مِّنْ رَّبِّهٖ ۗ قَالُوْٓا اِنَّا بِمَآ اُرْسِلَ بِهٖ مُؤْمِنُوْنَ ﴿٧٥﴾

(७५) उनका समुदायका अहंकारी प्रमुखहरूले आफ्ना निर्बलहरूसित जसले विश्वास गरेका थिए, भन्नथाले कि के तिमीलाई विश्वास छ कि सालेह आफ्नो परमेश्वरद्वारा पठाइएका हुन्, उनले भने कि हामी त्यसप्रति विश्वास राख्दछौं जुन कुराका साथ उनलाई पठाइएको छ।[4]

[1]यसको अर्थ हो कोमल धर्तीबाट माटो लिएर ईंटाहरू तयार गर्दछौ तथा ती ईंटाहरूबाट महल तयार गर्दछौ। जस्तै आज पनि भट्टाहरूमा यसैप्रकार माटोले ईंटाहरू तयार गरिन्छन्।

[2]यो उनको शारीरिक शक्ति तथा शिल्पकारीको वर्णन हो।

[3]अर्थात् यी उपकारमा अल्लाहप्रति कृतज्ञता व्यक्त गर तथा उसको आज्ञा पालनको मार्ग अपनाउ न कि उपकारको अवज्ञाको तथा नराम्रो कर्महरूलाई गरेर उपद्रव नफैलाउ।

[4]अर्थात् जुन एकेश्वरको आमन्त्रण उनी लिएर आएका छन्, त्यो प्राकृतिक अभियाचना हो, हामी त त्यसमा विश्वास गरेका छौं। शेष रहयो यो कुरो कि सालेह वास्तवमा अल्लाहका रसूल हुन्? जुन उनको प्रश्न थियो, त्यसबाट ती ईमानवालाहरूले इन्कार गरेनन् किनभने उनीहरू उनको अल्लाहको तर्फबाट

قَالَ الَّذِينَ اسْتَكْبَرُوا إِنَّا بِالَّذِي آمَنْتُمْ بِهِ كَافِرُونَ ﴿٧٦﴾

(७६) अहंकारी प्रमुखहरूले भने कि तिमी जो प्रति विश्वास गर्दछौ हामी विश्वास गर्दैनौं ।[1]

فَعَقَرُوا النَّاقَةَ وَعَتَوْا عَنْ أَمْرِ رَبِّهِمْ وَقَالُوا يَا صَالِحُ ائْتِنَا بِمَا تَعِدُنَا إِنْ كُنْتَ مِنَ الْمُرْسَلِينَ ﴿٧٧﴾

(७७) अत: उनीहरूले ऊँटनीलाई वध गरिदिए एवं आफ्नो परमेश्वरको आदेशको अवहेलना गरे तथा भने कि हे सालेह, यदि तिमी ईशदूत हौ भने आफ्नो धम्की पूरा गर ।

فَأَخَذَتْهُمُ الرَّجْفَةُ فَأَصْبَحُوا فِي دَارِهِمْ جَاثِمِينَ ﴿٧٨﴾

(७८) अनि उनलाई भूकम्पले आइ समात्यो[2] तथा उनी आफ्ना घरहरूमा घोप्टिएर परिरहे ।

فَتَوَلَّىٰ عَنْهُمْ وَقَالَ يَا قَوْمِ لَقَدْ أَبْلَغْتُكُمْ رِسَالَةَ رَبِّي وَنَصَحْتُ لَكُمْ وَلَٰكِنْ لَا تُحِبُّونَ النَّاصِحِينَ ﴿٧٩﴾

(७९) उनी (सालेह) तिनीहरूबाट मुख फर्काइ हिंडिदिए, तथा भने[3] कि हे मेरा वर्गका मानिसहरू ! मैले तिमीहरूलाई आफ्नो परमेश्वरको आदेश पुऱ्याइदिएँ तथा तिम्रो शुभ-चिन्तक रहें तर तिमी शुभ-चिन्तकहरूसित प्रेम गर्दैनौ ।

रसूल हुने कुरामा विवाद गर्न उचित ठान्दैनथे । तिनीहरूका निकट उनको रिसालत साक्षात वास्तविक एवं सत्य थियो, जस्तो कि वास्तवमा थियो ।

[1]यस उचित उत्तरका पश्चात उनीहरू घमण्डका कारण इन्कारमा अडिग रहे ।

[2]यहाँ (رجفة) (भूकम्प) को वर्णन छ । अन्य स्थानमा (صيحة) (गर्जन) को । यसबाट ज्ञात हुन्छ कि यी दुबै प्रकारका प्रकोप उनीमाथि आए । माथिबाट गर्जन तथा तलबाट भूकम्प । यी दुबै प्रकोपहरूले उनीहरूलाई नष्ट-विनष्ट गरिदियो ।

[3]यो नष्ट हुनुको पूर्वको सम्बोधन हो अथवा नष्ट हुनु पश्चात यसैप्रकारको सम्बोधन हो, जुन प्रकार रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले बद्रको युद्ध समाप्त भएपश्चात बद्रको स्थानमा मूर्तिपूजकहरूका लाशलाई सम्बोधन गर्दै भन्नुभएको थियो ।

وَ لُوْطًا اِذْ قَالَ لِقَوْمِهٖۤ اَتَاْتُوْنَ الْفَاحِشَةَ مَا سَبَقَكُمْ بِهَا مِنْ اَحَدٍ مِّنَ الْعٰلَمِيْنَ ﴿۸۰﴾

(८०) तथा हामीले लूतलाई पठायौं[1] जबकि उनले आफ्ना समुदायसित भने कि तिमी यस्ता कुकर्म गर्दछौ, जसलाई तिमीभन्दा पूर्व जगत्मा कसैले गरेन ।

اِنَّكُمْ لَتَاْتُوْنَ الرِّجَالَ شَهْوَةً

(८१) तिमी पुरूषहरूसँग सम्भोग गर्दछौ[2]

[1]आदरणीय लूत आदरणीय इब्राहीमका भतिजा थिए तथा आदरणीय इब्राहीममा विश्वास गर्नेहरू मध्यको थिए । अनि स्वयं उनलाई अल्लाहले एक क्षेत्रको नबी बनाएर पठायो । यो क्षेत्र जोर्डन तथा बैतुल मक़्दिसको मध्येको क्षेत्र हो, जसलाई सदूम भनिन्छ, यो धर्ती हरियाली तथा उब्जाउ थियो तथा यहाँ हरप्रकारको फल तथा अनाजको उब्जनी हुन्थ्यो । कुर्‌आनले यस स्थानलाई (مؤتفكة) अथवा (مؤتفكات) का शब्दहरूमा वर्णन गरेको छ । आदरणीय लूतले सर्वप्रथम सम्भवतः अल्लाह एक हुने कुरोको आमन्त्रण दिनुभयो, जुन प्रत्येक नबीको आमन्त्रणको आधारशिला थियो तथा सर्वप्रथम उनी यसैको आमन्त्रण आफ्नो समुदायलाई गर्ने गर्थे । जस्तो कि पछिल्ला नबीहरूका घटनाहरूमा वर्णन भर्खरै भइसकेको छ, हेर्न सकिन्छ । दोस्रो अन्य ठूलो नराम्रो कुरो थियो पुरूषहरूसँग कुकर्म, जुन लूतको समुदायमा थियो, त्यसको अवगुण तथा कुकर्मको वर्णन गर्नुभयो । यसबाट यो ज्ञात हुन्छ कि यो एउटा यस्तो पाप हो जसलाई सर्वप्रथम यसै लूतका समुदायले गरे, यस पापको नाम अरबीमा लवातत् पऱ्यो । यसकारण उचित ठानियो कि यस समुदायलाई मूल अपराधका दुष्परिणामहरूसित सूचित गरियोस् । यसको अतिरिक्त आदरणीय इब्राहीमद्वारा एकेश्वरवादको आमन्त्रण यहाँ पुगिसकेको होला । बाल मैथुनको दण्डमा इमामहरूको बीच मतभेद छ । केही इमामहरूका निकट त्यही दण्ड छ, जुन व्यभिचारको दण्ड छ । अर्थात् अपराधी यदि विवाहित छ भने ढुङ्गाले हानेर मारियोस्, यदि अविवाहित छ भने सय कोर्रा । केही ज्ञाताहरूका निकट यसको दण्ड ढुङ्गाले हानि मारिहाल्नु हो, चाहे अपराधी जस्तोसुकै होस् । केहीका निकट यो पाप गर्ने दुबैलाई वध गरियोस् । तर इमाम अबू हनीफ़ा केवल निन्दा गर्नुको दण्डको पक्षमा हुनुहुन्छ, कोर्रा अथवा कुनै अन्य प्रकारको दण्ड होइन । (तोहफ़तुल अहवज़ी भाग-५, पृष्ठ १७)

[2]अर्थात् पुरूषहरूको पासमा तिमी यस असभ्य कार्यको लागि मात्र सम्भोगको उद्देश्यले आउँछौ, त्यसको अतिरिक्त तिम्रो अन्य कुनै उद्देश्य हुँदैन जुन बुद्धिको योग्य हुन्छ । यस आधारमा उनी पशुहरू समान थिए जो मात्र संभोगको लागि एक-अर्कामाथि चढ्दछन् ।

مِّنْ دُوْنِ النِّسَآءِ ۭ بَلْ اَنْتُمْ قَوْمٌ مُّسْرِفُوْنَ ⑧١

स्त्रीहरूलाई छाडेर ।[1] बरू तिमी त सीमाभन्दा पर गइसकेका छौ ।[2]

وَمَا كَانَ جَوَابَ قَوْمِهٖٓ اِلَّآ اَنْ قَالُوْٓا اَخْرِجُوْهُمْ مِّنْ قَرْيَتِكُمْ ۚ اِنَّهُمْ اُنَاسٌ يَّتَطَهَّرُوْنَ ⑧٢

(८२) तथा उनका समुदायबाट कुनै उत्तर हुन सकेन यसबाहेक कि आपसमा भन्नथाले कि यिनीहरूलाई आफ्नो बस्तीबाट निकालिदेऊ । यिनीहरू ठूला पवित्र महात्मा बन्दछन् ।[3]

فَاَنْجَيْنٰهُ وَاَهْلَهٗٓ اِلَّا امْرَاَتَهٗ ڮ كَانَتْ مِنَ الْغٰبِرِيْنَ ⑧٣

(८३) अनि हामीले उसलाई (लूत) तथा उनका सम्बन्धिहरूलाई बचायौं उसकी पत्नीबाहेक किनकि त्यो तिनैमध्ये रह्यो जो (प्रकोपमा) परेका थिए ।[4]

[1]जुन सहवास तथा स्वादको उचित स्थान हो । यो उनको प्रकृति (भ्रष्ट हुने) कुरोतिर संकेत गर्दछ, अर्थात् अल्लाह तआलाले पुरूषको कामवासनाको तृप्तिको लागि स्त्रीको गुप्ताङ्गलाई स्थान तथा उचित भनेको छ परन्तु अत्याचारीहरूले यसलाई छाडेर पुरूषहरूको गुदालाई त्यसको लागि प्रयोग गर्न प्रारम्भ गरिदिए ।

[2]परन्तु अहिले यस अप्राकृतिक कर्म तथा अल्लाहको निर्धारित सीमाको उल्लंघनलाई आधुनिक मानिसहरूले अपनाएका छन् अनि यो मानव जातिको मौलिक अधिकार घोषित गरिदिएका छन् जसलाई रोक्ने कुनै अधिकार छैन । अब गुदा मैथुनलाई वैधानिक सुरक्षा प्राप्त छ तथा यो कुनै अपराध रहेन । (अल्लाहले हामीलाई यस पापबाट सुरक्षित राखून् ।

[3]यो त आदरणीय लूतलाई वस्तीबाट निकाल्नुको कारण हो । शेष उनको पवित्रताको प्रदर्शन या त वास्तविक रूपले छ तथा उनको उद्देश्य यो रह्यो कि यी मानिसहरू यस राम्रो कुराबाट बच्न चाहन्छन्, यसकारण राम्रो यही छ कि यिनी हाम्रो साथमा यस वस्तीमा नै रहून् । अथवा यो उपहास तथा मजाकको रूपमा उनले भनेका हुन् ।

[4](إنها كانت من الباقين في عذاب الله) अर्थात् त्यो उनीहरूमा शेष रहयो जसमाथि अल्लाहको प्रकोप आयो किनभने उनी पनि मुसलमान थिएनन् । त्यसको समर्थन पनि अपराधीहरूसित थियो । केही ज्ञाताहरूले यसको अनुवाद, "मर्नेहरू मध्येबाट" गरेका छन् । परन्तु यी पूरक अर्थ हुन्, वास्तविक अर्थ होइनन् ।

وَأَمْطَرْنَا عَلَيْهِم مَّطَرًا ۖ فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُجْرِمِينَ ﴿٨٤﴾

(८४) तथा हामीले उनीमाथि एउटा नयाँ प्रकारको वर्षा गर्‍यौं,[1] तसर्थ हेर कि ती अपराधिहरूको परिणाम के भयो ?[2]

وَإِلَىٰ مَدْيَنَ أَخَاهُمْ شُعَيْبًا ۗ قَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ ۖ قَدْ جَاءَتْكُم بَيِّنَةٌ مِّن رَّبِّكُمْ ۖ فَأَوْفُوا الْكَيْلَ وَالْمِيزَانَ وَلَا تَبْخَسُوا النَّاسَ

(८५) तथा हामीले मदयनतिर उनका भाई शोएबलाई पठायौं ।[3] उनले भने कि हे मेरा समुदायका मानिसहरू ! तिमी अल्लाहको (इबादत) पूजा गर त्यसबाहेक तिम्रो अन्य पूज्य छैन । तिम्रो प्रभुतिरबाट तिमीतिर स्पष्ट निशानी (लक्षण) आइसकेको छ, तसर्थ तिमी नाप-तौल

[1]यो विशेष प्रकारको वर्षा के थियो ? ढुङ्गाहरूको वर्षा, जुनप्रकारले अन्य स्थानमा हुकुम भएको छ:

﴿وَأَمْطَرْنَا عَلَيْهَا حِجَارَةً مِّن سِجِّيلٍ مَّنضُودٍ﴾

“हामीले उनीमाथि पत्रमाथि पत्र गरी ढुङ्गाहरूको वर्षा गर्‍यौं ।” (सूर: हूद-८२) यसभन्दा पूर्व अल्लाहको हुकुम भयो (جعلنا عاليها سافلها) “हामीले त्यस वस्तीलाई (पल्टाएर) तल पारिदियौं ।”

[2]अर्थात् हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) हेर्नुस् त, जो खुलारूपले अल्लाहका आदेशहरूको अवहेलना गर्दछन् तथा पैग़म्बरहरूलाई झुठ्लाउँछन्, उनको परिणाम के भयो ?

[3]मदयन आदरणीय इब्राहीमका पुत्र अथवा पौत्रको नाम थियो, अनि उनैको वंशसित सम्बन्धित समुदायको नाम पनि मदयन तथा जुन वस्तीमा उनी निवास गर्दथे उसको नाम पनि मदयन पर्‍यो । यसप्रकार यसलाई समुदाय तथा बस्ती दुबैको लागि भनिन्छ । यो वस्ती हिजाज क्षेत्रको मार्गमा मआनको निकट छ । यिनैलाई कुर्‌आनमा अन्य स्थानमा (أَصْحَابُ الأَيْكَة) (वनका निवासी) पनि भनिएको छ । उनीतिर आदरणीय शोएब नबी बनाएर पठाइयो । हेर्नुस् (सूर: अल-शुअराअ-१६७)

**टिप्पणी:** प्रत्येक नबीलाई उनको समुदायको भाई भनिएको छ । जसको अर्थ त्यसै समुदाय तथा जातिको एउटा व्यक्ति हो, जसलाई केही स्थानमा (رسولا منهم) अथवा (من أنفسهم) पनि भनिएको छ । तथा अर्थ ती सबैको यही हो कि रसूल तथा नबी मनुष्यहरू मध्येबाट नै एउटा मनुष्य हुन्छ जसलाई अल्लाह तआ़ला मानिसहरूको मार्गदर्शनको लागि रोज्दछ तथा प्रकाशना (वह्‌यी) द्वारा त्यसमाथि आफ्नो किताब तथा आदेश अवतरित गर्दछ ।

أَشْيَآءَهُمْ وَلَا تُفْسِدُوا۟ فِى ٱلْأَرْضِ بَعْدَ إِصْلَٰحِهَا ۚ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٨٥﴾

पूरा-पूरा गर्ने गर तथा मानिसहरूलाई तिनका वस्तुहरू कम नपारीदेउ ।[1] तथा सम्पूर्ण धर्तीमा सुधार गरिदिए पश्चात उपद्रव न फैलाउ । यो तिम्रो निम्ति लाभकारी छ यदि तिमी निष्ठावान हौ भने ।

وَلَا تَقْعُدُوا۟ بِكُلِّ صِرَٰطٍ تُوعِدُونَ وَتَصُدُّونَ عَن سَبِيلِ ٱللَّهِ مَنْ ءَامَنَ بِهِۦ وَتَبْغُونَهَا عِوَجًا ۚ وَٱذْكُرُوٓا۟ إِذْ كُنتُمْ قَلِيلًا فَكَثَّرَكُمْ ۖ وَٱنظُرُوا۟ كَيْفَ كَانَ عَٰقِبَةُ ٱلْمُفْسِدِينَ ﴿٨٦﴾

(८६) तथा तिमी प्रत्येक मार्गमा यसकारण नबस कि धम्की देउ र त्यस व्यक्तिलाई अल्लाहको मार्गबाट रोक्न थाल जो त्यसमा ईमान राख्दछ र न त्यस मार्गलाई बाङ्गो बनाउनमा लाग ।[2] स्मरण गर त्यो समय जब तिमी थोरै थियौ, अनि उसले तिमीलाई अधिक गरिदियो र हेर बिगाड पैदा गर्नेहरूको कस्तो परिणाम भयो ।

[1]तौहीद (अद्वैत) को प्रचारको पश्चात त्यस वर्गमा नाप तौलको कमी एउटा ठूलो दोष थियो जसबाट रोकियो तथा पूरा-पूरा नाप तौल गर्नुको शिक्षा दिइयो, यो दोष पनि अति भयावह छ जसबाट त्यस समुदायको नैतिक पतनबारे थाहा हुन्छ जसमा यो दोष पाइन्छ । यो अति घोर अपभोग हो कि पैसा त पूरा-पूरा लिइयोस् तथा कुरा कम दिइयोस् । अतः सूरः मुतफ़्फ़ेफ़ीनमा यस्तै मानिसहरूका लागि विनाशको सूचना दिइएको छ ।

[2]अल्लाहको मार्गबाट रोक्नको लागि त्यसमा त्रुटिको खोजी गर्नु प्रत्येक युगका दूराचारीहरूको प्रिय व्यवहार रहिआएको छ, जसको उदाहरण वर्तमानमा धर्मका आधुनिकीकरणकारीहरू तथा पश्चिमी सभ्यताका प्रेमीहरूमा देखिन्छ । (अल्लाहले हामीलाई तिनीबाट सुरक्षित राखून) यसबाहेक अल्लाहको मार्गबाट रोक्नुको अरू पनि कैयन् अर्थ लगाइएका छन्, उदाहरणार्थ मानिसहरूलाई दुःख दिनको लागि मार्गहरूमा बस्नु जस्तो कि दूराचारीहरूको आचरण हो, अथवा आदरणीय शोएबतिर जाने मार्गहरूबाट रोक्नु ताकि जो मानिसहरू उता जान्छन् उनीहरूलाई रोक्न तथा भ्रममा पारियोस्, जस्तो मक्का नगरका कुरैश गर्दथे अथवा धर्मका मार्गहरूमा बस्नु तथा धर्मावलम्बीहरूलाई त्यसबाट रोक्नु अथवा लुटमारको लागि नाकाहरूमा बस्नु ताकि बटुवाहरूलाई लुटून्, अथवा केही विद्वानहरूका समीप कर तथा चुङ्गी लिनको लागि मार्गहरूमा बस्नु हो । इमाम शौकानीले भनेका छन् कि यी सबै अर्थ यस अन्तर्गत आउन सक्छन् किनभने यो सम्भव छ कि ती सबै उपरोक्त दुराचार गर्दैरहेका होउन् । (फ़तहुल क़दीर)

(८७) तथा यदि तिमीमध्ये केही मानिसहरूले त्यस आदेशप्रति विश्वास गरे जोसित म पठाइएको छु तथा केहीले विश्वास गरेका छैनन् भने अलि धैर्य गर यहाँसम्मकि अल्लाह हाम्रो बीच निर्णय गरिदेओस् तथा त्यो सर्वोत्तम न्यायकारी छ ।[1]

وَإِنْ كَانَ طَآئِفَةٌ مِّنْكُمْ اٰمَنُوْا بِالَّذِيْٓ اُرْسِلْتُ بِهٖ وَطَآئِفَةٌ لَّمْ يُؤْمِنُوْا فَاصْبِرُوْا حَتّٰى يَحْكُمَ اللّٰهُ بَيْنَنَا ۚ وَهُوَ خَيْرُ الْحٰكِمِيْنَ ﴿٨٧﴾

[1]यो अधर्मलाई सहन गर्न आदेश होइन बरू उनको लागि धम्की तथा चेतावनी हो किनभने अल्लाहको निर्णय सदाचारीहरूमाथि दुराचारीहरूमा विजय तथा प्रभुत्व दिनको लागि नै हुन्छ । यो यस्तो नै छ जस्तो कि अर्को स्थानमा उसको कथन छ कि

(فتربصوا إنا معكم متربصون)

"तिमी प्रतीक्षा गर हामी पनि तिमीसँग प्रतीक्षा गरिराखेका छौं ।" (सूरः तौबा-५२)

قَالَ الْمَلَأُ الَّذِينَ اسْتَكْبَرُوا مِن قَوْمِهِ لَنُخْرِجَنَّكَ يَا شُعَيْبُ وَالَّذِينَ آمَنُوا مَعَكَ مِن قَرْيَتِنَا أَوْ لَتَعُودُنَّ فِي مِلَّتِنَا ۚ قَالَ أَوَلَوْ كُنَّا كَارِهِينَ ﴿٨٨﴾

(८८) तिनका वर्गका घमण्डी प्रमुखहरूले भने हे शोएब ! हामीले तिमीलाई एवं जसले तिमीसँग ईमान स्थापित गरेका छन् उनीहरूलाई अवश्य आफ्ना वस्तीबाट निकालेर छाड्नेछौं अन्यथा तिमी फेरि हाम्रो धर्ममा आईहाल ।[1] उनले भने जबकि हामी त्यससित घृणा गर्दछौं ?[2]

قَدِ افْتَرَيْنَا عَلَى اللَّهِ كَذِبًا إِنْ عُدْنَا فِي مِلَّتِكُم بَعْدَ إِذْ نَجَّانَا اللَّهُ مِنْهَا ۚ وَمَا يَكُونُ لَنَا أَن نَّعُودَ فِيهَا إِلَّا أَن يَشَاءَ اللَّهُ رَبُّنَا ۚ وَسِعَ

(८९) हामी त अल्लाहमाथि मिथ्याको आरोपण गर्नेछौं यदि तिम्रो धर्ममा फेरि फर्केर आयौं जबकि अल्लाहले हामीलाई त्यसबाट मुक्त गरिदिएको छ[3] तथा हाम्रो लागि त्यसमा फेरि फर्केर आउनु सम्भव छैन परन्तु यो कि अल्लाहले चाहोस् जो

[1]यी नाइकेहरूको घमण्ड तथा अभिमानको अनुमान गर्नुस् जबकि उनीहरूले ईमान तथा एकेश्वरबाद (तौहीद) को आमन्त्रणको मात्र खण्डन गरेनन् बरू अल्लाहको पैग़म्बर तथा ईमानवालाहरूलाई चेतावनी पनि दिए कि या त तिमी आफ्ना पूर्वजहरूका धर्ममा फर्केर आइहाल अन्यथा हामीले तिमीलाई यहाँबाट निकालिदिनेछौं । ईमान भएकाहरूलाई आफ्नो पूर्वको धर्ममा ल्याउने कुरो केही सीमासम्म समझमा आउँछ, किनभने उनीहरूले कुफ्रलाई छाडि ईमानको मार्ग अपनाएका थिए, परन्तु आदरणीय शोएबलाई पनि पूर्वजहरूको समुदायतिर फर्कनुको आमन्त्रण यसकारण थियो कि उनी उनलाई पनि नबूवत र चेतावनी तथा आमन्त्रण भन्दा पूर्व आफ्ना धर्ममा अनुयायी ठान्दथे । यद्यपि वास्तवमा यो सत्य होइन । अथवा अधिकतरको कारण उनको गणना पनि उनीहरूमै गरिहाले जो पहिला आफ्ना पूर्वजहरूका धर्ममा थिए ।

[2]यो लुप्त प्रश्नको उत्तर हो, जसमा अरबी वर्णमालाको हम्ज़ा इन्कार गर्नको लागि छ तथा वाव अक्षर दशाको वर्णनको लागि छ । अर्थात के तिमी हामीलाई आफ्नो धर्ममा पुन: ल्याउने छौ अथवा हामीलाई आफ्नो नगरीबट निकाल दिन्छौ जबकि हामी यस धर्ममा पुनर्गमन निस्कनमा रुचि राख्दैनौं । अभिप्राय यो हो कि तिम्रो लागि यस्तो गर्नु उचित छैन कि तिमी हामीलाई दुबै मध्येबाट कुनै एकलाई स्वीकार गर्न बाध्य गर ।

[3]अर्थात् यदि हामी पूर्वजहरूको धर्मतिर फर्केर आउँछौं जसबाट अल्लाह तआलाले हामीलाई मुक्त गरिदिएको छ, त यसको अर्थ यो हुनेछ कि हामीले ईमान तथा एकेश्वरवाद (तौहीद) को आमन्त्रण दिएर अल्लाहमाथि झूठो आरोपण गरेका थियौं । अर्थ यो भयो कि यो सम्भव छैन कि हाम्रो तर्फबाट यस्तो होस् ।

رَبُّنَا ۚ وَسِعَ رَبُّنَا كُلَّ شَيْءٍ عِلْمًا ۚ عَلَى اللَّهِ تَوَكَّلْنَا ۚ رَبَّنَا افْتَحْ بَيْنَنَا وَبَيْنَ قَوْمِنَا بِالْحَقِّ وَأَنتَ خَيْرُ الْفَاتِحِينَ ﴿٨٩﴾

हाम्रो पोषक हो ।[१] हाम्रो परमेश्वरले प्रत्येक वस्तुलाई आफ्नो ज्ञानको परिधिमा राखेको छ, हामीले आफ्नो अल्लाहमा नै भरोसा गरेका छौं ।[२] हे हाम्रो परमेश्वर ! हाम्रा एवं हाम्रा समुदाय बीच सत्यताका साथ निर्णय गरिदेउ तथा तिमी सर्वोत्तम निर्णायक हौ ।[३]

وَقَالَ الْمَلَأُ الَّذِينَ كَفَرُوا مِن قَوْمِهِ لَئِنِ اتَّبَعْتُمْ شُعَيْبًا إِنَّكُمْ إِذًا لَّخَاسِرُونَ ﴿٩٠﴾

(९०) तथा उनका वर्गका काफिर प्रमुखहरूले भने कि यदि तिमीले शोएबको अनुसरण गर्‍यौ भने त्यसबखत तिमी निःसन्देह क्षतिग्रस्त हुनेछौ ।[४]



[१]आफ्नो संकल्प व्यक्त गरे पश्चात यस विषयलाई अल्लाहको इच्छामा सुम्पिदियौं । अर्थात हामी आफ्नो इच्छाले अब कुफ्रतिर फर्कन सक्दैनौं । हो, यदि अल्लाह चाहन्छ भने अर्कै कुरा हो । केही विद्वानहरूले भन्छन् कि यो ﴿حَتَّىٰ يَلِجَ الْجَمَلُ فِي سَمِّ الْخِيَاطِ﴾ को समान असम्भवसित सम्बन्धित गर्नुछ अर्थात् जस्तै सियोको प्वालमा ऊँटको प्रवेश असम्भव छ, यसैप्रकार हाम्रो आफ्ना पूर्वजहरूका धर्ममा पुर्नगमन असम्भव छ ।

[२]कि त्यसले हामीलाई ईमानमा दृढ राख्नेछ तथा हामी एवं अधर्म तथा अधर्मीहरूका मध्य पर्खाल बनिरहने छ । हामीमाथि आफ्नो उपकारको वर्षा गर्नेछ तथा आफ्नो यातनाबाट सुरक्षित राख्नेछ ।

[३]तथा अल्लाह जब निर्णय गर्छ त यही हुन्छ कि त्यसले ईमानवालाहरूलाई सुरक्षित राखेर झूठा तथा घमण्डीहरू सर्वनाश गरिदिन्छ । यो मानौं अल्लाहको प्रकोपको माँग हो ।

[४]आफ्ना पूर्वजहरूको धर्मलाई छाड्नु तथा नाप-तौलमा कमी नगर्नु, यो उनका निकट हानिको कुरा थियो । वास्तविकता यो थियो कि यसमा उनैको लाभ थियो, तर संसारमा लिप्त भएको दृष्टिमा लाभ नै सबैकुरो हुन्छ, जुन नाप तौलमा कमी गर्नुमा उनीहरूलाई प्राप्त भइराखेको थियो, उनीहरू ईमानवालाहरूको दीर्घगामी लाभको लागि त्यसलाई किन छाड्थे ?

(९१) अन्ततः उनलाई भूकम्पले आइ समात्यो, यसकारण उनीहरू आफ्ना घरहरूमा अजीवित घोप्टिएको अवस्थामा रहे ।[1]

فَأَخَذَتْهُمُ الرَّجْفَةُ فَأَصْبَحُوا فِي دَارِهِمْ جَاثِمِينَ ﴿٩١﴾

(९२) जसले शोएबलाई झूठा भने, उनको यो स्थिति भयो मानौं ती (घरहरू) मा कहिल्यै बसेकै थिएनन् ।[2] जसले शोएबलाई झुठ्लाए ती नै हानिमा परे ।[3]

الَّذِينَ كَذَّبُوا شُعَيْبًا كَأَن لَّمْ يَغْنَوْا فِيهَا ۚ الَّذِينَ كَذَّبُوا شُعَيْبًا كَانُوا هُمُ الْخَاسِرِينَ ﴿٩٢﴾

(९३) त्यसबेला शोएब उनीबाट विमुख भई हिंडे तथा भने कि हे मेरा समुदायका मानिसहरू ! मैले आफ्नो प्रभुको सन्देश तिमीलाई पुऱ्याएँ तथा मैले तिम्रो शुभचिन्ता गरें, अनि म ती काफ़िरहरूबारे दुःखी किन होउ ?[4]

فَتَوَلَّىٰ عَنْهُمْ وَقَالَ يَا قَوْمِ لَقَدْ أَبْلَغْتُكُمْ رِسَالَاتِ رَبِّي وَنَصَحْتُ لَكُمْ ۖ فَكَيْفَ آسَىٰ عَلَىٰ قَوْمٍ كَافِرِينَ ﴿٩٣﴾

---

[1]यहाँ (رجفة) (रज़फ़ः) आएको छ जसको अर्थ भूकम्प हो तथा सूरः हूद आयत संख्या ९४ मा (صيحة) शब्द "चीत्कार" को अर्थमा प्रयोग भएको छ । इमाम इब्ने कसीर भन्दछन् कि प्रकोपमा यो सबै भयो । अर्थात् छायाँ भएको दिनमा प्रकोप आयो, सर्वप्रथम मेघहरूको छायाँमा आगोका ज्वाला, फिलिङ्गा, अनि आकाशबाट अति तीब्र गर्जन भयो तथा धर्तीमा भूकम्प आयो, जसको कारण उनका आत्माले शरीर छाडिदिए तथा अजीवित शव बनेर पंक्षीहरू जस्तै लम्पसार परिरहे ।

[2]अर्थात् जुन बस्तीबाट यिनी अल्लाहका दूत तथा उनका अनुयायीहरूलाई निकाल्नमा अडिग थिए, अल्लाहको तर्फबाट प्रकोप हुनुको कारण यस्ता भए, मानौं तिनीहरू यहाँ बस्दै बसेका थिएनन् ।

[3]अर्थात् हानिमा ती मानिसहरू परे जसले पैग़म्बरहरूलाई झुठ्लाए, न कि पैग़म्बर तथा उनीमाथि विश्वास गर्नेहरू । तथा हानि पनि दुबै लोकमा । संसारमा अपमानको यातनाको स्वाद चाखे तथा परलोकमा तिनका निम्ति अत्याधिक दुःखदायी कठोर यातना तयार छ ।

[4]यातना तथा सर्वनाशको पश्चात जब उनी (आदरणीय शोएब) त्यहाँबाट हिंडे, त अत्याधिक भावुक भएर भने तथा साथसाथै यो पनि भने कि जब मैले सत्यको चेतावनीको दायित्व निर्वाह गरे एवं अल्लाहको सन्देश उनीसम्म पुऱ्याए, त अब म यस्ता मानिसहरूमाथि आफ्नो संवेदनाको प्रदर्शन किन गरूँ ? जो यस उपरान्त आफ्नो अविश्वास तथा अनेकेश्वरवादमा अडिग रहे ।

وَمَآ أَرۡسَلۡنَا فِي قَرۡيَةٖ مِّن نَّبِيٍّ إِلَّآ أَخَذۡنَآ أَهۡلَهَا بِٱلۡبَأۡسَآءِ وَٱلضَّرَّآءِ لَعَلَّهُمۡ يَضَّرَّعُونَ ٩٤

(९४) तथा हामीले जहिले पनि कुनै वस्तीमा नबी पठायौं, त त्यहाँका मानिसहरूलाई रोग तथा दरिद्रतामा पार्‍यौ ताकि उनीहरू बिन्ती गरून् ।[1]

ثُمَّ بَدَّلۡنَا مَكَانَ ٱلسَّيِّئَةِ ٱلۡحَسَنَةَ حَتَّىٰ عَفَواْ وَّقَالُواْ قَدۡ مَسَّ ءَابَآءَنَا ٱلضَّرَّآءُ وَٱلسَّرَّآءُ فَأَخَذۡنَٰهُم بَغۡتَةٗ وَهُمۡ لَا يَشۡعُرُونَ ٩٥

(९५) अनि हामीले त्यस दरिद्रतालाई सम्पन्नतामा बदलिदियौं, अनि उनीहरू सम्पन्न भएपश्चात भन्नथाले कि हाम्रा पूर्वजहरूले पनि दरिद्रता तथा उन्नतिको सामना गर्नुपरेको थियो, तब हामीले सहसा उनलाई समात्यौं ।[2] तथा उनलाई सूचना पनि थिएन ।

[1](بأساء) (बासाअ) को शब्दार्थ शारीरिक दु:ख अथवा रोग हो तथा (ضراء) (जर्राअ) को अर्थ निर्धनता एवं दरिद्रता हो । तात्पर्य यो हो कि जुनसुकै बस्तीमा पनि हामीले सन्देशवाहक पठायौं, उनीहरूले त्यसलाई झुठ्लाए, जसको प्रत्युपकारमा हामीले उनलाई रोग एवं दीनतामा ग्रस्त गर्‍यौं, जसबाट उद्देश्य यो थियो कि यिनी अल्लाहतिर फर्कुन् तथा उसित विनय गरून् ।

[2]अर्थात् निर्धनता तथा रोगमा ग्रस्त हुनुको कारण अब उनीहरूमा अल्लाहतिर ध्यान केन्द्रित गर्ने तथा त्यसको मार्गमा हिंड्ने भावना पनि उत्पन्न भएन, त हामीले उनको निर्धनतालाई धन-धान्यले परिपूर्ण तथा रोगलाई स्वास्थ्यमा परिवर्तित गरिदियौं ताकि उनी त्यसमा अल्लाहप्रति कृतज्ञता व्यक्त गर्न सकुन् । परन्तु यस आन्दोलनबाट पनि उनको जीवन शैलीमा परिवर्तन आएन तथा उनले भने कि यो त सधैं हुँदै आएको छ, कहिले निर्धनता आयो कहिले धन-धान्यले परिपूर्ण भयो । कहिले रोग त कहिले स्वस्थ्य, कहिले रङ्क कहिले राजा अर्थात् निर्धनताको प्रथम उपचार न उनको लागि सफल रह्यो तथा न धन-धान्यले परिपूर्णता, उनको सुधारको लागि सफल सिद्ध भयो । उनी यसलाई रात-दिनको चक्र नै ठाने तथा त्यसको पछाडि कार्यरत अल्लाहको इच्छालाई बुझ्न असफल रहे, अनि हामीले उनलाई एक्कासि आफ्नो प्रकोपको पकडमा लियौं । यसैकारण हदीसमा मुसलमानहरूको लागि यसको विपरीत वर्णित गरिएको छ कि उनी वैभव तथा सुविधा प्राप्त भए अल्लाहप्रति कृतज्ञता व्यक्त गर्छन् तथा दु:ख पुग्दा धैर्यले काम लिन्छन्, यसप्रकार दुबै स्थिति उनको लागि कल्याणकारी तथा पुण्यको कारण बन्दछ । (सहीह मुस्लिम किताबुज़ जुहद बाबुल मोमिन अमरूहू कुल्लुहू ख़ैर)

وَلَوْ اَنَّ اَهْلَ الْقُرٰٓى اٰمَنُوْا وَاتَّقَوْا لَفَتَحْنَا عَلَيْهِمْ بَرَكٰتٍ مِّنَ السَّمَآءِ وَالْاَرْضِ وَلٰكِنْ كَذَّبُوْا فَاَخَذْنٰهُمْ بِمَا كَانُوْا يَكْسِبُوْنَ ﴿٩٦﴾

(९६) र यदि ती नगरहरूका निवासी ईमान स्थापित गरेको तथा संयम धारण गरेको भए हामीले उनीहरूका लागि आकाश एवं धर्तीका विभूतिहरूको ढोका खोलिदिने थियौं तर उनीहरूले झुठ्लाए, त हामीले उनीहरूलाई उनीहरूका कुकर्मका कारण समातिहाल्यौं।

اَفَاَمِنَ اَهْلُ الْقُرٰٓى اَنْ يَّاْتِيَهُمْ بَاْسُنَا بَيَاتًا وَّهُمْ نَآئِمُوْنَ ﴿٩٧﴾

(९७) के तैपनि यी बस्तीहरूका निवासी यस कुराबाट निश्चिन्त भइसकेका छन् कि उनीमाथि हाम्रो प्रकोप रात्रिका समय आइ समात्न सक्छ जब उनी निद्रामा हुन्छन्।

اَوَاَمِنَ اَهْلُ الْقُرٰٓى اَنْ يَّاْتِيَهُمْ بَاْسُنَا ضُحًى وَّهُمْ يَلْعَبُوْنَ ﴿٩٨﴾

(९८) तथा के ती बस्तीहरूका मानिस यस कुराबाट निश्चिन्त भइहालेका छन् कि उनीमाथि हाम्रो प्रकोप दिउँसै आउन सक्छ जुनबेला उनीहरू खेलमा व्यस्त हुन्छन्?

اَفَاَمِنُوْا مَكْرَ اللّٰهِ ۚ فَلَا يَاْمَنُ مَكْرَ اللّٰهِ اِلَّا الْقَوْمُ الْخٰسِرُوْنَ ﴿٩٩﴾

(९९) अन्ततः के उनीहरू अल्लाहको योजनाबाट निश्चिन्त भए? त अल्लाहको योजनाबाट क्षतिग्रस्त मानिसहरू[1] नै निश्चिन्त हुन्छन्।

اَوَلَمْ يَهْدِ لِلَّذِيْنَ يَرِثُوْنَ الْاَرْضَ مِنْۢ بَعْدِ اَهْلِهَآ

(१००) त के जो धर्तीमा त्यसका निवासीहरूको विनाशका पश्चात उत्तराधिकारी



[1]यी आयतमा अल्लाह तआलाले सर्वप्रथम यो वर्णन गरेको छ कि ईमान (विश्वास) तथा संयम यस्तो विषय हो कि जुन वस्तीका मानिसहरू त्यसलाई अपनाउँछन् उनीमाथि अल्लाह तआला आकाश तथा धर्तीका धनसम्पत्तिहरूका बाट खोलिदिन्छ अर्थात आवश्यकता अनुसार आकाशबाट वर्षा गर्दछ तथा धर्तीलाई त्यसबाट सिंचेर उब्जनीलाई बढाउँछ। परिणामस्वरूप उन्नति तथा समृद्धि हुन्छ, परन्तु यसको विपरित झुठ्लाउने तथा कुफ्रको मार्ग अपनाउने समुदाय अल्लाहको प्रकोपका अधिकारी हुन्छन्, अनि ज्ञान हुँदैन कि रात्रि-दिन कुन समय प्रकोप आईपुग्छ तथा खेल्दै-खाँदै यस वस्तीलाई एक क्षणमा भग्नावशेषमा परिवर्तन गरिदिन्छ। यसकारण अल्लाहका यी प्रकोपहरूबाट निश्चिन्त हुनुहुँदैन। यस निश्चिन्तताको परिणाम मात्र हानि बाहेक अरू केही हुँदैन। (مَكْرٌ) (मकर) को भावार्थको लागि हेर्नुस् सूर:आले-इमरान आयत ५४ को व्याख्या।

أَن لَّوْ نَشَآءُ أَصَبْنَٰهُم بِذُنُوبِهِمْ ۚ وَنَطْبَعُ عَلَىٰ قُلُوبِهِمْ فَهُمْ لَا يَسْمَعُونَ ﴿١٠٠﴾

भएका छन् उनीहरूलाई ज्ञान भएन कि यदि हामी चाहन्छौं भने उनका पापहरूका कारण उनीहरूलाई विपदामा पारिदिन्छौं तथा उनका हृदयमा मोहर (छाप) लगाईदिन्छौं ताकि उनी सुन्न नसकून् ।[1]

تِلْكَ الْقُرَىٰ نَقُصُّ عَلَيْكَ مِنْ أَنبَآئِهَا ۚ وَلَقَدْ جَآءَتْهُمْ رُسُلُهُم بِالْبَيِّنَٰتِ فَمَا كَانُوا لِيُؤْمِنُوا

(१०१) यी नगरहरूका केही घटना हामी तपाईंलाई भनिराखेका छौं तथा उनका ईशदूत उनका पासमा तर्कहरू सहित आए ।[2] तैपनि जसलाई उनीहरूले पहिला मानेनन्, त्यसलाई फेरि मान्ने योग्य भएनन् ।[3]

[1]अर्थात् पापहरूको परिणाम स्वरूप केवल प्रकोप नै आउँदैन, हृदयहरूमा पनि ताल्चा लाग्छन् । अनि ठूला भन्दा ठूला प्रकोप पनि उनलाई निश्चिन्तताको निद्राबाट ब्यूँझाउन सक्दैनन् । अन्य केही स्थानहरूमा भए जस्तै अल्लाह तआ़लाले यहाँ पनि वर्णन गरेको छ कि जुन प्रकार हामीले पूर्वका समुदायहरूलाई उनका पापका कारण नष्ट गर्‍यौं, हामीले चाहेको अवस्थामा तिमीलाई पनि तिम्रा कुकर्महरूका परिणामस्वरूप नष्ट गर्न सक्दछौं । तथा अर्को कुरो यो वर्णित गरियो कि सत्यको आवाजको निम्ति उनका कान थुनिन्छन् । अनि चेतावनी एवं शिक्षा उनका लागि व्यर्थ भएर जान्छ ।

[2]जुन प्रकार पूर्वका पानाहरूमा केही नवीहरूको वर्णन गरियो, (بَيِّنَات) (बइयेनात) को अर्थ तर्क, तथा युक्ति एवं चमत्कार दुवैसित छ। उद्देश्य यो हो कि रसूलद्वारा जवसम्म हामीले आफ्ना निशानीहरू देखाएनौं, हामीले उनलाई कष्ट पुऱ्याएनौं । किनभने

﴿وَمَا كُنَّا مُعَذِّبِينَ حَتَّىٰ نَبْعَثَ رَسُولًا﴾

"जबसम्म हामी रसूल पठाउँदैनौ, प्रकोप अवतरित गर्दैनौं ।" (सूरः बनी इस्राईल-१५)

[3]यसको एउटा भावार्थ यो हो कि प्रतिज्ञा दिवसमा जब उनीसित बचन लिइएको थियो त यिनी अल्लाहका ज्ञानमा ईमान ल्याउनेवाला थिएनन्, यसकारण जब उनको पासमा अल्लाहका रसूल आए त अल्लाहको ज्ञान अनुसार उनीहरू ईमान ल्याएनन् (विश्वास गरेनन्) । किनभने उनको भाग्यमा ईमान ल्याउनु थिएन, जसलाई अल्लाहले आफ्नो ज्ञानको अनुसार लेखिदिएको थियो । जसलाई हदीसमा (فَكُلٌّ مُيَسَّرٌ لِمَا خُلِقَ لَهُ) (सहीह बुख़ारी तफ़सीर सूरतुल लैल) सित तुलना गरिएको छ । दोस्रो भावार्थ यो हो कि जब उनको पासमा पैग़म्बर आए, त उनी यसकारण त्यसमा विश्वास गरेनन् किनभने उनी यसभन्दा पूर्व सत्यलाई झुठ्लाइसकेका थिए । अर्थात् प्रारम्भमा नै जुन कुरोलाई झुठ्लाई सकेका थिए, त्यही पाप उनको ईमान कायम नगर्नुको कारण बन्यो तथा ईमान ल्याउनुको सौभाग्यबाट उनी बञ्चित भए, यसैकारण आउने वाक्यमा छाप लगाउने कुरोसित तुलना गरिएको छ ।

بِمَا كَذَّبُوا۟ مِن قَبْلُ ۚ كَذَٰلِكَ يَطْبَعُ ٱللَّهُ عَلَىٰ قُلُوبِ ٱلْكَٰفِرِينَ ﴿١٠١﴾

यसप्रकार अल्लाह विश्वासहीनहरूका हृदयमा मुद्रा (छाप) लगाईदिन्छ ।

وَمَا وَجَدْنَا لِأَكْثَرِهِم مِّنْ عَهْدٍ ۖ وَإِن وَجَدْنَآ أَكْثَرَهُمْ لَفَٰسِقِينَ ﴿١٠٢﴾

(१०२) तथा हामीले उनका अधिकतर मानिसहरूलाई वचनको पालना गरेको पाएनौं[1] तथा हामीले उनीहरूमध्ये अधिकतरलाई अवज्ञाकारी पायौं ।

ثُمَّ بَعَثْنَا مِنۢ بَعْدِهِم مُّوسَىٰ بِـَٔايَٰتِنَآ إِلَىٰ فِرْعَوْنَ وَمَلَإِي۟هِۦ فَظَلَمُوا۟ بِهَا ۖ فَٱنظُرْ كَيْفَ كَانَ عَٰقِبَةُ ٱلْمُفْسِدِينَ ﴿١٠٣﴾

(१०३) अनि उनका पश्चात हामीले (ईशदूत) मूसालाई आफ्ना लक्षणहरूका साथ फिरऔन एवं उसका प्रमुखहरूका पासमा पठायौं ।[2] तब उनीहरूले उनको हक पूरा गरेनन् । अनि हेर कि उपद्रवीहरूको अन्त कस्तो रहयो ।[3]

وَقَالَ مُوسَىٰ يَٰفِرْعَوْنُ إِنِّى رَسُولٌ مِّن رَّبِّ ٱلْعَٰلَمِينَ ﴿١٠٤﴾

(१०४) तथा मूसाले भन्नुभयो, हे फ़िरऔन ! म सम्पूर्ण जगतको प्रभुतिर बाट पैग़म्बर हूँ ।

﴿ وَمَا يُشْعِرُكُمْ أَنَّهَآ إِذَا جَآءَتْ لَا يُؤْمِنُونَ ۞ وَنُقَلِّبُ أَفْـِٔدَتَهُمْ وَأَبْصَٰرَهُمْ كَمَا لَمْ يُؤْمِنُوا۟ بِهِۦٓ أَوَّلَ مَرَّةٍ ﴾

"तथा तिमीलाई के ज्ञात छ यिनी त यस्तै (दूर्भाग्यशाली) हुन् कि यिनको पासमा निशानीहरू पश्चात पनि विश्वास गर्दैनन् तथा हामी उनका हृदय तथा आँखालाई उल्टाइदिनेछौं (त) जस्तो यिनी यस (कुर्आन) मा पहिलो पटक ईमान सुदृढ गरेनन्, त्यस्तै फेरि पनि गर्ने छैनन् ।" (सूरः अल-अनाम-१०९ तथा ११०)

[1]यसबाट केही ज्ञाताहरूले अल्लाहको प्रभु हुने कुरोको वचन लिएका छन् जुन आत्माहरूको लोकमा लिइएको थियो, केहीले प्रकोप हटाउनको लागि पैग़म्बरसित जुन सन्धि गर्दथे, ती वचन अथवा सन्धिहरू तथा केहीले सामान्य वचनसित तात्पर्य लिएका छन्, जुन आपसमा एक-अर्कासित गर्दथे । र यो वचन भङ्ग गर्नु, चाहे कुनै प्रकारको होस्, भ्रष्ट कार्य हो ।

[2]यहाँवाट आदरणीय मूसाको वर्णन प्रारम्भ भइराखेको छ, जो वर्णित नबीहरूका पश्चात आए, जो महान सम्मानित पैग़म्बर थिए, जसलाई मिश्रको फ़िरऔन तथा त्यसको जनताको पासमा निशानीहरू तथा चमत्कार दिएर पठाइएको थियो ।

[3]अर्थात् उनीहरूलाई डुबाइयो जस्तो कि अगाडि आउने छ ।

حَقِيقٌ عَلَىٰٓ أَن لَّآ أَقُولَ عَلَى ٱللَّهِ إِلَّا ٱلْحَقَّ ۚ قَدْ جِئْتُكُم بِبَيِّنَةٍ مِّن رَّبِّكُمْ فَأَرْسِلْ مَعِىَ بَنِىٓ إِسْرَٰٓءِيلَ ﴿١٠٥﴾

(१०५) मेरो लागि यही योग्य छ कि सत्यबाहेक अल्लाहसित सम्बद्ध अरू कुनै कुरा नबोलूँ । म तिम्रो प्रभुको तर्फबाट एउटा ठूलो निशानी पनि ल्याएको छु ।[1] यसकारण तिमी इस्राईलका सन्तानलाई मसँग पठाइदेउ ।[2]

قَالَ إِن كُنتَ جِئْتَ بِـَٔايَةٍ فَأْتِ بِهَآ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ﴿١٠٦﴾

(१०६) त्यस (फ़िरऔन) ले भन्यो यदि तपाईं कुनै चमत्कार लिएर आउनुभएको छ भने, त्यसलाई प्रस्तुत गर्नुस् यदि तपाईं सत्य हुनुहन्छ ।

فَأَلْقَىٰ عَصَاهُ فَإِذَا هِىَ ثُعْبَانٌ مُّبِينٌ ﴿١٠٧﴾

(१०७) तब तपाईंले आफ्नो छडी (लौरो) ले हिर्काउनुभयो, त त्यो सहसा (एक्कासि) एउटा स्पष्ट अजिङ्गर सर्प बनिहाल्यो ।

وَنَزَعَ يَدَهُۥ فَإِذَا هِىَ بَيْضَآءُ لِلنَّٰظِرِينَ ﴿١٠٨﴾

(१०८) तथा आफ्नो हात बाहिर निकाल्नु भयो, तब त्यो सहसा सबै हेर्नेहरूका समक्ष धेरै टल्किने कुरो भएको देखियो ।[3]

قَالَ ٱلْمَلَأُ مِن قَوْمِ فِرْعَوْنَ

(१०९) फ़िरऔनले वर्गका प्रमुखसित भन्यो

[1]जुन यस कुराको प्रमाण हो कि म वास्तवमा अल्लाहतिरबाट पठाइएको रसूल हूँ । यस चमत्कार र ठूलो निशानीको वर्णन पनि अगाडि आउनेछ ।

[2]इस्राईलका सन्तान जसको मूल निवास सीरियाको क्षेत्र थियो, आदरणीय यूसुफको समयमा मिश्र गइहालेका थिए अनि त्यहींका निवासी भए । फिरऔनले उनीहरूलाई दास बनाएर राखेको थियो तथा उनीमाथि विभिन्न प्रकारको अत्याचार गर्दथ्यो जसको विस्तृत वर्णन सूर: अल-बकर:मा भइसकेको छ तथा अगाडि पनि आउने छ । फ़िरऔन तथा त्यसका दरबारका मन्त्रीहरूले जब आदरणीय मूसाको आमन्त्रणलाई अस्वीकार गरिदिंए तब आदरणीय मूसाले दोस्रो माँग गर्नुभयो कि इस्राईलका सन्तानलाई स्वतन्त्र गरिदेउ ताकि उनी आफ्ना मूल स्थानमा गई मान-सम्मानका जीवन व्यतीत गरून् तथा अल्लाहको पूजा गरून् ।

[3]अर्थात् अल्लाह तआलाले जुन दुईटा ठूला चमत्कार प्रदान गर्नुभएको थियो, आफ्नो सत्यताको लागि त्यसलाई प्रस्तुत गरिदिनु भयो ।

إِنَّ هَٰذَا لَسَٰحِرٌ عَلِيمٌ ١٠٩

कि यो बडो ज्ञाता (निपुण) जादुगर छ ।[1]

يُرِيدُ أَن يُخْرِجَكُم مِّنْ أَرْضِكُمْ ۖ فَمَاذَا تَأْمُرُونَ ١١٠

(११०) त्यसले तिमीहरूलाई तिम्रो देशबाट निकाल्न चाहन्छ अनि तिमीहरूले के विचार दिन्छौ ?

قَالُوٓا أَرْجِهْ وَأَخَاهُ وَأَرْسِلْ فِى ٱلْمَدَآئِنِ حَٰشِرِينَ ١١١

(१११) उनीहरूले भने कि तपाईं त्यसलाई तथा त्यसको भाईलाई समय दिनुस् तथा नगरहरूमा एकत्र कर्ताहरू (हरकाराहरू) लाई पठाइदिनुस्

يَأْتُوكَ بِكُلِّ سَٰحِرٍ عَلِيمٍ ١١٢

(११२) ताकि उनीहरूले सबै कुशल जादूगरहरूलाई तपाईंको समक्ष ल्याएर उपस्थित गरून् ।[2]

وَجَآءَ ٱلسَّحَرَةُ فِرْعَوْنَ قَالُوٓا إِنَّ لَنَا لَأَجْرًا إِن كُنَّا نَحْنُ ٱلْغَٰلِبِينَ ١١٣

(११३) तथा जादुगर फ़िरऔनको पासमा आए र भने कि यदि हामी सफल भयौं भने के हाम्रो लागि कुनै प्रतिकार छ ?

[1]चमत्कारलाई देखेर विश्वास गर्नुको सट्टा फ़िरऔनका सभासदहरूले त्यसलाई जादू भने कि यो त बडो दक्ष जादूगर छ । यसबाट त्यसको उद्देश्य तिम्रो राज्य समाप्त गर्नु हो । किनभने आदरणीय मूसाको समयमा जादूको सामान्य प्रचलन भइराखेको थियो, यसकारण चमत्कारलाई पनि उनीहरूले जादू भन्ठाने, जसमा अलिकति पनि मनुष्यको अधिकार हुँदैन । शुद्धरूपले अल्लाहको इच्छाबाट नै प्रदर्शित हुन्छन् । यसप्रकार यस विषयबाट फ़िरऔनका दरबारियाहरूका लागि आदरणीय मूसाको विरूद्ध फ़िरऔनलाई भ्रमित पार्ने अवसर प्राप्त भयो ।

[2]आदरणीय मूसाको समयमा जादूगरहरूलाई ठूलो सम्मान प्राप्त थियो, यसैकारण आदरणीय मूसाद्वारा प्रस्तुत चमत्कारलाई पनि उनीहरूले जादू भन्ठाने तथा जादूद्वारा त्यसको काटको योजना बनाए । जस्तो कि अन्य स्थानमा आदेश छ कि फ़िरऔन तथा त्यसका दरबारियाहरूले भने, "हे मूसा ! के तिमी चाहन्छौं कि आफ्नो जादूको शक्तिले हामीलाई आफ्नो धर्तीबाट निष्कासित गरिदेउ, अतः हामीले पनि यस्तै जादू यसको प्रतिस्पर्धामा ल्याउनेछौं, यसको लागि कुनै उचित स्थान तथा समयको निर्धारण हामी स्वयं गरौं जसको दुबैले पालना गरौं । आदरणीय मूसाले भने कि नवरोजका दिन (नयाँ दिन) तथा चाश्त (नाश्ता) को समय हो, यस हिसाबले सबै एकत्रित हुनेछन् ।" (सूरः ताहा-५७ देखि ८१ सम्म)

قَالَ نَعَمْ وَإِنَّكُمْ لَمِنَ الْمُقَرَّبِينَ ﴿١١٤﴾

(११४) उसले भन्यो हो, र तिमी सबै निकटवर्ती मानिसहरूमा हुनेछौ ।[1]

قَالُوا يَا مُوسَىٰ إِمَّا أَن تُلْقِيَ وَإِمَّا أَن نَّكُونَ نَحْنُ الْمُلْقِينَ ﴿١١٥﴾

(११५) ती (जादूगरहरू) ले भने कि हे मूसा ! चाहे (पहिला) तपाईंले हाल्नुस् अथवा हामीले नै हालौं ।[2]

قَالَ أَلْقُوا ۖ فَلَمَّا أَلْقَوْا سَحَرُوا أَعْيُنَ النَّاسِ وَاسْتَرْهَبُوهُمْ وَجَاءُوا بِسِحْرٍ عَظِيمٍ ﴿١١٦﴾

(११६) (मूसा) ले भने कि तिमीले नै हाल ।[3] अनि जब उनीहरूले हाले त मानिसहरूको आँखामा जादू गरिदिए तथा उनलाई भयभीत बनाइदिए तथा एक प्रकारको ठूलो जादू देखाए ।[4]

[1]जादूगरले दुनियाँ प्राप्त गर्ने इच्छा राख्दथे यसकारण उनीहरूले जादूको प्रशिक्षण लिएका थिए, तसर्थ राम्रो अवसर देखे कि राजालाई हाम्रो आवश्यकता भएको छ, अवसरको फाइदा लिएर बढीभन्दा बढी लाभ किन न प्राप्त गर्ने । अत: उनीहरूले सफलता पश्चात त्यसको प्रतिफलको लागि माँग प्रस्तुत गरे, जसमा फ़िरऔनले भन्यो कि मात्र धन नै प्राप्त हुनेछैन बरू हाम्रा निकटवर्ती मानिसहरूमा सम्मिलित हुनेछौ ।

[2]जादूगरहरूले यो अधिकार आफूमाथि पूर्ण भरोसा हुनुको कारण दिए । उनीहरूले पूर्ण विश्वास गर्दथे कि उनको मुकाबिलामा मूसाको चमत्कार जसलाई उनीहरू जादू नै ठान्दथे, कुनै स्थान राख्दैन तथा यदि मूसालाई पहिले नै आफ्नो कलाको प्रदर्शनको अवसर दिए पनि त्यसबाट कुनै अन्तर पर्नेछैन । हामीले उसको कलाको तोड कुनै प्रकारले गरिदिनेछौं ।

[3]परन्तु मूसा अलैहिस्सलाम अल्लाहका रसूल थिए तथा उनलाई अल्लाहको समर्थन प्राप्त थियो, यसकारण उनलाई आफ्नो अल्लाहमाथि पूर्ण विश्वास थियो । अत: उनले बिना कुनै चिन्ता तथा विचार गरी उनीहरूसित भने कि तिमीले जे-जति देखाउनु छ देखाउ । यसको अतिरिक्त यसमा यो बुद्धिमानी पनि हुनसक्छ कि जादूगरहरूद्वारा प्रस्तुत जादूको तोड यदि आदरणीय मूसाद्वारा प्रदर्शित हुनेछ भने त्यसले मानिसहरूलाई अधिक प्रभावित गर्नेछ, जसबाट उनको सत्यता स्पष्ट भएर आउनेछ तथा मानिसहरूलाई विश्वास गर्नुमा कठिनाई हुनेछैन ।

[4]केही पुरातत्वमा भनिएको छ कि यी जादूगरहरूको संख्या ७० हजार थियो । प्रत्यक्ष रूपले यो संख्या अतिश्योक्तिबाट बञ्चित छैन, जसमा प्रत्येकले एउटा लठ्ठी तथा एउटा डोरी मैदानमा हाने जुन मानिसहरूलाई दगुरिराखेको प्रतीत भएको थियो । यो अर्थात् उनीद्वारा प्रदर्शित निकै ठूलो जादू थियो ।

وَأَوْحَيْنَآ إِلَىٰ مُوسَىٰٓ أَنْ أَلْقِ عَصَاكَ ۖ فَإِذَا هِىَ تَلْقَفُ مَا يَأْفِكُونَ ﴿١١٧﴾

(११७) तथा हामीले मूसालाई आदेश दियौं कि आफ्नो लौरो हान, अनि त्यसले अकस्मात उनको स्वाङ्ग (नक्कली कुरो) लाई निल्न थाल्यो ।[1]

فَوَقَعَ ٱلْحَقُّ وَبَطَلَ مَا كَانُوا۟ يَعْمَلُونَ ﴿١١٨﴾

(११८) अत: सत्य प्रकट भयो र उनीहरूले जे-जति बनाएका थिए, सबै जाँदै गऱ्यो ।

فَغُلِبُوا۟ هُنَالِكَ وَٱنقَلَبُوا۟ صَٰغِرِينَ ﴿١١٩﴾

(११९) अत: उनीहरू यस अवसरमा पराजित भएर अति अपमानित भई फर्के ।

وَأُلْقِىَ ٱلسَّحَرَةُ سَٰجِدِينَ ﴿١٢٠﴾

(१२०) तथा जादूगरहरुले ढोगे ।

قَالُوٓا۟ ءَامَنَّا بِرَبِّ ٱلْعَٰلَمِينَ ﴿١٢١﴾

(१२१) तब भन्नथाले हामीले सम्पूर्ण जगतको प्रभुमा विश्वास गऱ्यौं ।

رَبِّ مُوسَىٰ وَهَٰرُونَ ﴿١٢٢﴾

(१२२) जो मूसा तथा हारूनको पनि प्रभु हो ।[2]

قَالَ فِرْعَوْنُ ءَامَنتُم بِهِۦ قَبْلَ أَنْ ءَاذَنَ لَكُمْ ۖ إِنَّ هَٰذَا لَمَكْرٌ مَّكَرْتُمُوهُ فِى ٱلْمَدِينَةِ لِتُخْرِجُوا۟

(१२३) फ़िरऔनले भन्यो तिमी त्यस (मूसा) मा मेरो आज्ञाभन्दा पहिला विश्वास गऱ्यौ नि:सन्देह यो एउटा षड्यन्त्र हो जुन तिमीले नगरमा

---

[1]परन्तु यो जे-जति पनि थियो, एउटा काल्पनिक, जादूगरी तथा जादू थियो, जुन वास्तविकताको सामना गर्न सक्दैनथ्यो । अत: मूसाले लौरो हान्नासाथ सबै समाप्त भयो तथा लौरोले एक भयानक अजिङ्गरको रूप धारण गरी सबै निल्यो ।

[2]जादूगरहरूले जो जादूको कला तथा त्यसको वास्तविकतालाई जान्दथे यो देखेपछि बुझे कि मूसाले यहाँ जे-जति प्रस्तुत गरेको छ, जादू होइन, उनी वास्तवमा अल्लाहका दूत हुन्, तथा अल्लाहको सहायताले नै यो चमत्कार प्रस्तुत गरेका छन् जसले एकक्षणमै हामी सबैको कलालाई समाप्त पारिदियो । अत: उनीहरूले मूसामा निष्ठाको घोषणा गरिदिए । यसबाट यो कुरा स्पष्ट भयो कि असत्य, असत्य हो, चाहे त्यसमाथि जति पनि आकर्षक वस्त्र राखियोस् तथा सत्य सत्य नै हो चाहे त्यसमाथि जति पनि अरू कुराको पत्र राखियोस् । अन्तिम विजय सत्यकै हुन्छ ।

مِنْهَآ أَهْلَهَاۖ فَسَوْفَ تَعْلَمُونَ ﴿١٢٣﴾

त्यसका निवासीहरूलाई त्यसबाट निकाल्नको लागि रचेका हौ। अतः तिमीलाई शीघ्र नै थाहा हुनेछ।[1]

لَأُقَطِّعَنَّ أَيْدِيَكُمْ وَأَرْجُلَكُم مِّنْ خِلَافٍ ثُمَّ لَأُصَلِّبَنَّكُمْ أَجْمَعِينَ ﴿١٢٤﴾

(१२४) मैले तिम्रो एकातिरको हात तथा अर्कोतिरको खुट्टा काटिदिनेछु। अनि तिमी सबैलाई फाँसीमा झुण्ड्याइ दिनेछु।[2]

قَالُوٓا۟ إِنَّآ إِلَىٰ رَبِّنَا مُنقَلِبُونَ ﴿١٢٥﴾

(१२५) (उनीहरूले) उत्तर दिए कि हामी (मरेर) आफ्नो प्रभुको पासमा नै जानेछौं।[3]

وَمَا تَنقِمُ مِنَّآ إِلَّآ أَنْ ءَامَنَّا بِـَٔايَٰتِ رَبِّنَا لَمَّا جَآءَتْنَاۚ رَبَّنَآ أَفْرِغْ عَلَيْنَا صَبْرًا وَتَوَفَّنَا مُسْلِمِينَ ﴿١٢٦﴾

(१२६) तथा तिमीले हामीमा यही दोष त देखेका छौ कि हामीले आफ्नो परमेश्वरका आयतहरू (लक्षणहरू) प्रति विश्वास गर्‍यौ,[4] जब त्यो हाम्रो पासमा आयो, हे हाम्रा परमेश्वर ! हामीमा

[1]यो जे-जति भयो फ़िरऔनको लागि बडो आश्चर्यजनक विषय थियो, यसकारण त्यसको समझमा अरू केही आएन र यो भन्यो कि तिमी सबै आपसमा मिलेका छौ तथा उसको उद्देश्य हाम्रो राज्यलाई समाप्त गर्नु हो। त हेर, यसको परिणाम निकट भविष्यमा तिमीलाई ज्ञात हुनेछ।

[2]अर्थात् दायाँ खुट्टा तथा बायाँ हात बायाँ खुट्टा अथवा तथा दायाँ हात, अनि यति मात्रै होइन्, फाँसीमा झुण्ड्याएर अरूहरूको लागि शिक्षा बनाइ दिनेछु।

[3]यसको भावार्थ यो हो कि यदि तिमीले हाम्रो साथमा यस्तो व्यवहार गर्छौ भने तिमीलाई पनि यस कुराको लागि तयार रहनुपर्छ कि केयामतका दिन अल्लाह तआलाले तिमीलाई यस अपराधको कठोर दण्ड दिनेछ, यसकारण कि हामी सबैलाई मरेर उसैको पासमा जानु छ, त्यसको दण्डबाट को बच्न सक्छ र ? अर्थात् फ़िरऔनलाई संसारको यातनाको सापेक्ष आख़िरतको यातनासित तर्साइएको छ। दोस्रो भावार्थ यो हो कि मृत्यु त हामीलाई आउँने नै छ। यसबाट के अन्तर पर्छ कि फाँसीको पासोबाट आओस् अथवा अन्य साधनबाट।

[4]अर्थात् तिम्रो निकट हाम्रो यही दोष छ जसबाट तिमी हामीसित क्रोधित छौ र हामीलाई दण्ड दिनेछौं। जबकि यो कुनै दोष होइन यो त गुण हो कि जब वास्तविकता हाम्रो समक्ष आइपुग्यो, त हामीले त्यसको तुलनामा संसारका सारा लाभ लत्याइदियौं तथा वास्तविकतालाई अपनायौं। अनि उनीहरूले आफ्ना मुख फिरऔनतिरबाट फर्काइ अल्लाहतिर गरे तथा अल्लाहको दरबारमा प्रार्थना गर्नथाले।

धैर्य प्रवाहित गरिदेउ[1] तथा हामीलाई मुसलमान छँदै मृत्यु देउ ।[2]

(१२७) तथा फ़िरऔनका जातिका प्रमुखहरूले भने कि के तपाईंले मूसा एवं त्यसको क़ौमलाई यसै छाडिदिनु हुनेछ ताकि प्रदेशमा उपद्रव गरून्[3] तथा तपाईंका देवताहरूलाई त्यागिदेऊन् ।[4] उसले भन्यो हामी उनका पुत्रहरूको हत्या गर्नेछौं तथा उनका स्त्रीहरूलाई जीवित रहन दिनेछौं। हामी उनीमाथि प्रभावी छौं।[5]

وَقَالَ الْمَلَأُ مِنْ قَوْمِ فِرْعَوْنَ أَتَذَرُ مُوسَىٰ وَقَوْمَهُ لِيُفْسِدُوا فِي الْأَرْضِ وَيَذَرَكَ وَآلِهَتَكَ ۚ قَالَ سَنُقَتِّلُ أَبْنَاءَهُمْ وَنَسْتَحْيِي نِسَاءَهُمْ وَإِنَّا فَوْقَهُمْ قَاهِرُونَ ﴿١٢٧﴾

(१२८) मूसाले आफ्नो क़ौमसित भने कि अल्लाह (तआ़ला) को सहायता प्राप्त गर तथा धैर्य राख यो धर्ती अल्लाह (तआ़ला) कै हो, त्यसले

قَالَ مُوسَىٰ لِقَوْمِهِ اسْتَعِينُوا بِاللَّهِ وَاصْبِرُوا ۖ إِنَّ الْأَرْضَ لِلَّهِ

[1]ताकि हामीले तिम्रो यस शत्रुको यातनालाई सहन गर्न सकौं तथा सत्यसित सम्बन्धित एवं ईमानमा दृढतापूर्वक स्थापित रहौं ।

[2]यस सांसारिक परीक्षाबाट हामी भित्र ईमानको लागि न परिवर्तन आओस् न कुनै अन्य विषयमा हामी अल्झौं ।

[3]यो प्रत्येक कालका भ्रष्टाचारीहरूको कार्य रहिआएको छ कि उनी निष्ठावानहरूलाई उपद्रवी तथा उनको ईमानको आमन्त्रण तथा एकेश्वरवाद (तौहीद) लाई उपद्रवसित तुलना गर्दछन्, फ़िरऔनका अनुयायीहरूले पनि यही गरे ।

[4]फ़िरऔनलाई पनि यद्यपि स्वयं प्रभु हुने कुरोको दाबी थियो ﴿أَنَا رَبُّكُمُ الْأَعْلَىٰ﴾ "म तिम्रो ठूलो प्रभु हूँ ।" (त्यसले भन्ने गर्दथ्यो) परन्तु अरू स-साना देवता पनि थिए, जसद्वारा मानिसहरू फ़िरऔनको निकटता प्राप्त गर्दथे ।

[5]हाम्रो यस प्रबन्धमा यिनी बाधा पुऱ्याउन सक्दैनन् । पुत्रहरूको हत्याको यो कार्यक्रम पुन: फ़िरऔनका अनुयायीहरूको भनाईबाट बनाइयो । यसभन्दा पूर्व पनि जब मूसा अलैहिस्सलामको जन्म भएको थिएन, इस्राईलका सन्तानहरूका नवजात शिशुको हत्या गर्न प्रारम्भ गरिसकेको थियो । मूसाको जन्म पश्चात अल्लाहले उनलाई बचाउन प्रबन्ध गऱ्यो कि मूसालाई स्वयं फ़िरऔनको महलमा पुऱ्याइदियो तथा उसको काखमा पालन-पोषण गरायो ।

يُورِثُهَا مَن يَشَاءُ مِنْ عِبَادِهِ ۖ وَالْعَاقِبَةُ لِلْمُتَّقِينَ ﴿١٢٨﴾

आफ्ना भक्तहरू मध्ये जसलाई चाहन्छ, स्वामित्व प्रदान गर्दछ तथा अन्तिम सफलता उनीहरूलाई नै प्राप्त हुन्छ, जो अल्लाहसित तर्सन्छन् ।[1]

قَالُوا أُوذِينَا مِن قَبْلِ أَن تَأْتِيَنَا وَمِن بَعْدِ مَا جِئْتَنَا ۚ قَالَ عَسَىٰ رَبُّكُمْ أَن يُهْلِكَ عَدُوَّكُمْ وَيَسْتَخْلِفَكُمْ فِي الْأَرْضِ فَيَنظُرَ كَيْفَ تَعْمَلُونَ ﴿١٢٩﴾

(१२९) उनीहरूले भने कि तपाईं आउनु भन्दा पहिला पनि[2] हामीलाई कष्ट दिइयो तथा तपाईंको आगमन पश्चात पनि ।[3] उनले भने कि शीघ्र नै अल्लाह तिम्रा शत्रुहरूलाई विनाश गरिदिनेछ तथा यस धर्तीको स्वामित्व तिमीलाई दिइनेछ अनि यो हेर्नेछ कि तिम्रो आचरण कस्तो छ ?[4]

وَلَقَدْ أَخَذْنَا آلَ فِرْعَوْنَ بِالسِّنِينَ وَنَقْصٍ مِّنَ الثَّمَرَاتِ لَعَلَّهُمْ يَذَّكَّرُونَ ﴿١٣٠﴾

(१३०) तथा हामीले फ़िरऔनवालाहरूलाई अनिकाल एवं फलहरूको कमीबाट ग्रस्त पार्यौं ताकि उनीहरूले शिक्षा प्राप्त गर्न सकून् ।[5]

---

[1]जब फ़िरऔनतिरबाट पुन: अत्याचार प्रारम्भ भयो त आदरणीय मूसाले आफ्नो जातिका मानिसहरूलाई अल्लाहको सहायता प्राप्त गर्न तथा धैर्य राख्न शिक्षा दिए कि यदि तिमी सत्य-मार्गमा रह्यौ भने अन्तत: धर्तीको राज्य तिमीलाई नै प्राप्त हुनेछ ।

[2]यो संकेत ती अत्याचारहरूतिर छ, जुन मूसाको जन्मभन्दा पूर्व उनीमाथि हुने गर्थ्यो ।

[3]जादूगरको घटना पश्चात अत्याचारको यो नयाँ चरण प्रारम्भ भयो, जुन मूसा अलैहिस्सलामको आगमन पश्चात प्रारम्भ भयो ।

[4]आदरणीय मूसा अलैहिस्सलामले सान्त्वना दिए कि नआत्तिनु, तिम्रा शत्रु शीघ्र नै नष्ट गरिने छन्, तथा धर्तीमा तिमीलाई स्वामित्व प्राप्त हुनेछ । अनि तिम्रो परीक्षाको एउटा नयाँ चरणको प्रारम्भ हुनेछ । अहिले त कष्ट तथा कठिनाईहरूबाट परीक्षा लिइँदैछ, अनि तिमीलाई पुरस्कृत तथा कृपाको वर्षा तथा स्वामित्व प्रदान गरेर तिम्रो परीक्षा लिइनेछ ।

[5]फ़िरऔनका सन्तानसित तात्पर्य फ़िरऔनका अनुयायीहरू हुन् । तथा सेनीन (سِنِين) सित अकाल तथा सुख्खा अर्थात् वर्षाको कमी तथा वृक्षहरूमा कीरा लाग्नाको कारण पैदावारमा कमी हो । यस परीक्षाबाट उद्देश्य यो थियो कि शायद उनी यस अत्याचार तथा घमण्डबाट रोकिऊन् जसमा उनीहरू लिप्त छ ।

فَإِذَا جَآءَتۡهُمُ ٱلۡحَسَنَةُ قَالُواْ لَنَا هَٰذِهِۦۖ وَإِن تُصِبۡهُمۡ سَيِّئَةٞ يَطَّيَّرُواْ بِمُوسَىٰ وَمَن مَّعَهُۥٓۗ أَلَآ إِنَّمَا طَٰٓئِرُهُمۡ عِندَ ٱللَّهِ وَلَٰكِنَّ أَكۡثَرَهُمۡ لَا يَعۡلَمُونَ ١٣١

(१३१) यदि उनको पासमा भलाई आउँछ त भन्दछन् कि यो हाम्रो निम्ति हुनैपर्छ तथा यदि विपदा आउँछ भने मूसा तथा उनका अनुयायीहरूबाट अपशगुनका रूपमा लिन्छन्[1] सुनिहाल, उनको अपशगुन अल्लाहसित छ ।[2] किन्तु उनीहरूमा अधिकतर मानिसहरू बुझ्दैनन् ।

وَقَالُواْ مَهۡمَا تَأۡتِنَا بِهِۦ مِنۡ ءَايَةٖ لِّتَسۡحَرَنَا بِهَا فَمَا نَحۡنُ لَكَ بِمُؤۡمِنِينَ ١٣٢

(१३२) तथा उनीहरूले भने कि हाम्रा नजिक जुनसुकै निशानी हामीमाथि जादू चलाउनको निम्ति ल्याउँछौ हामीले तिम्रो विश्वास गर्ने छैनौं ।[3]

فَأَرۡسَلۡنَا عَلَيۡهِمُ ٱلطُّوفَانَ وَٱلۡجَرَادَ وَٱلۡقُمَّلَ وَٱلضَّفَادِعَ

(१३३) पछि हामीले उनीमाथि तूफान तथा सलह एवं जुम्रा, कीरा तथा भ्यागुता एवं रगत पठायौं

[1](حَسَنَةٌ) (हसनः) सित तात्पर्य अनाज तथा फलहरूको प्रचुरता तथा (سَيِّئَةٌ) को अर्थ हो नराम्रो कुरो, जसबाट तात्पर्य हसनःको विपरीत अकाल, सूखा तथा उब्जनीको कमी हो (حَسَنَةٌ) (हसनः) को सम्पूर्ण विशेषता स्वयंले लिन्थे कि यो हाम्रा प्रयत्नहरूका परिणाम हो तथा विपदाको कारण आदरणीय मूसा उनका अनुयायीहरूलाई बताउँछन् कि यो तिमीहरूका अशुभ प्रभाव हाम्रो देशमा परिरहेका छन् ।

[2](طائر) को अर्थ हो, "उड्नेप्राणी" अर्थात् पंक्षी । किनभने उनीहरू पंक्षीहरूको दायाँ तथा बायाँबाट उड्ने कुरोलाई शुभ तथा अशुभ मान्ने गर्दथे । यसकारण यो शब्द पूर्णरूपले "फालनामा" को लागि प्रयोग हुनथाल्यो तथा यहाँ यो यसै अर्थमा प्रयोग भएको छ । अल्लाह तआलाले भन्नुभयो कि राम्रो अथवा नराम्रो खुशहाली तथा अकाल जुन उनीहरूलाई पुग्दछ, त्यसका कारण अल्लाह तआलाका तिरबाट हुन्, मूसा तथा उनका अनुयायीतिरबाट होइन । ﴿طَٰٓئِرُهُمۡ عِندَ ٱللَّهِ﴾ को अर्थ हुन्छ कि अपशगुनको कारण अल्लाहको ज्ञानमा छ तथा त्यो उनको कुफ्र तथा अवहेलना हो न कि केही अन्य कुरो अथवा अल्लाहको तर्फबाट छ तथा यसको कारण उनको कुफ्र हो ।

[3]यो त्यसै कुफ्र तथा मिथ्या आरोपका प्रदर्शन हो जसमा उनीहरू अग्रसित भएका थिए तथा चमत्कार एवं अल्लाहका निशानीहरूलाई अहिले पनि जादूगरी भन्थे तथा भन्न लगाउँथे ।

وَالدَّمَ اٰيٰتٍ مُّفَصَّلٰتٍ فَاسْتَكْبَرُوْا وَكَانُوْا قَوْمًا مُّجْرِمِيْنَ ﴿١٣٣﴾

अलग-अलग निशानीहरू[1] अनि उनीहरूले अहंकार गरे तथा उनी पापी थिए ।

وَلَمَّا وَقَعَ عَلَيْهِمُ الرِّجْزُ قَالُوْا يٰمُوْسَى ادْعُ لَنَا رَبَّكَ بِمَا عَهِدَ عِنْدَكَ ۚ لَئِنْ كَشَفْتَ عَنَّا الرِّجْزَ لَنُؤْمِنَنَّ لَكَ وَلَنُرْسِلَنَّ مَعَكَ بَنِيْٓ اِسْرَآءِيْلَ ﴿١٣٤﴾

(१३४) तथा जब उनीमाथि प्रकोप आउँथ्यो तब भन्थे कि हे मूसा ! हाम्रो लागि आफ्नो परमेश्वरसित त्यस वचनद्वारा जुन तपाईंलाई दिइएको छ प्रार्थना गरिदिनुस्, यदि तपाईंले हामीबाट प्रकोप हटाइदिनुभयो भने हामी अवश्य तपाईंमा ईमान स्थापित गर्नेछौं तथा तपाईंसँग इस्राईलका पुत्रहरूलाई पठाइदिनेछौं ।

فَلَمَّا كَشَفْنَا عَنْهُمُ الرِّجْزَ اِلٰٓى اَجَلٍ

(१३५) अनि जब हामीले उनीबाट त्यस प्रकोपलाई एक विशेष समयका लागि जहाँसम्म कि उनलाई पुग्नु थियो,

[1]तूफ़ानसित तात्पर्य छ बाढी, अत्याधिक वर्षा, जसमा प्रत्येक वस्तु डुब्यो अथवा मृतहरूको अधिक संख्या हो । जसबाट प्रत्येक घरमा दुःखका बादलहरूले घेरे । (جراد) (जराद) सलहलाई भन्दछन् । सलह दलको आक्रमण फसलहरूको बिनाशको सूचक हो तथा यसको लागि प्रसिद्ध छ । यी सलह तिनका फसल तथा फलहरूलाई खाएर सिध्याइ दिन्थे । (قُمَّل) (कुम्मल) सित तात्पर्य जूँ (जुम्रा) जुन मनुष्यको शरीर तथा लुगा तथा कपालहरूमा पर्दछन् अथवा किरा जुन अनाजमा लाग्छ त यसका अधिकतर भागलाई समाप्त गरिदिन्छ । जुम्रासित मनुष्यलाई घृणा पनि हुन्छ तथा उसको अधिकताबाट अत्याधिक कठिनाई पनि, तथा जब यो प्रकोपको रूपमा हुन्छ त त्यसको कठिनाईको अनुमान लगाउन सकिन्छ । यसप्रकार किराहरू प्रकोप पनि आर्थिक स्थितिलाई खुकुलो पारिदिनको लागि पर्याप्त छ । (ضَفادِع) अरबी भाषामा ضفدع (दिफ्दअ:) को बहुवचन हो । यो भ्यागुतालाई भन्दछन्, जुन पानी, धर्ती तथा भुप्राका छाप्राहरूमा रहन्छ । यो भ्यागुतो उनको भोजनमा, ओछ्यानमा, राखिएका अनाजहरूमा अर्थात् प्रत्येक स्थानमा तथा हरेक दिशामा भ्यागुताहरू नै देखिन्छन्, जसबाट उनको खानपान, निन्द्रा तथा विश्राम कठिन भयो । (دَم) (दम) को अर्थ रगत हो जसको तात्पर्य हो पानी रगतमा परिणित हुनु, यसप्रकार पानी पिउन उनको लागि असम्भव भइहाल्यो । केहि विद्वानहरू रगतको तात्पर्य नकसीर (पिनाश) को रोग लिएका छन अर्थात् प्रत्येक व्यक्तिको नाकबाट रगत प्रभावित भयो । (آيات مُفَصَّلات) यी स्पष्ट तथा भिन्न-भिन्न प्रकारका चमत्कार थिए, जुन समय-समयमा उनको पासमा आए ।

هُمْ بٰلِغُوْهُ اِذَا هُمْ يَنْكُثُوْنَ ۝

हटाइ दिन्थ्यौं, त उनीहरूले तुरून्तै वचन भङ्ग गर्नथाल्थे ।[1]

فَانْتَقَمْنَا مِنْهُمْ فَاَغْرَقْنٰهُمْ فِي الْيَمِّ بِاَنَّهُمْ كَذَّبُوْا بِاٰيٰتِنَا وَكَانُوْا عَنْهَا غٰفِلِيْنَ ۝

(१३६) त्यसपछि हामीले उनीसित बदला लियौं अर्थात् उनीहरूलाई समुद्रमा डुबाइदियौं, यसकारण कि उनीहरू हाम्रा निशानीहरूलाई झुठ्लाउँथे तथा त्यसप्रति अत्यन्त असावधानी गर्दथे ।[2]

وَاَوْرَثْنَا الْقَوْمَ الَّذِيْنَ كَانُوْا يُسْتَضْعَفُوْنَ مَشَارِقَ الْاَرْضِ وَمَغَارِبَهَا الَّتِيْ بٰرَكْنَا فِيْهَا ؕ وَتَمَّتْ كَلِمَتُ رَبِّكَ الْحُسْنٰى عَلٰى

(१३७) तथा हामीले उनीहरूलाई जो अति निर्बल गनिन्थे[3] त्यस धर्तीको पूर्व एवं पश्चिमका उत्तराधिकारी बनाइदियौं जसमा हामीले विभूतिहरू राखेका छौं ।[4] तथा तपाईंको पोषकको

[1]अर्थात् एउटा प्रकोप आउँथ्यो भने त्यसबाट आत्तिएर मूसाको पासमा आउँथे उनको प्रार्थनाले त्यो समाप्त हुन्थ्यो त निष्ठावानहरूको सट्टा, पुनः त्यस कुफ्र तथा शिर्क (बहुदेववाद) मा दृढ हुन्थे । अनि दोस्रो प्रकोप आउँथ्यो भने यसैप्रकार गर्दथे, यसरी अलि-अलि समयको अन्तरमा उनीमाथि पाँच प्रकारका प्रकोप आए । परन्तु उनीहरूको हृदयमा जुन गर्व तथा मस्तिष्कमा घमण्ड थियो, त्यो सत्य मार्गमा आउनको लागि ठूलो बाधक रहयो तथा यति स्पष्ट निशानीहरू देखे पश्चात पनि उनी ईमानबाट बञ्चित रहे ।

[2]यति ठूला-ठूला प्रतीकहरूका उपरान्त उनी ईमान ल्याउन तथा अचेत निद्राबाट सचेत हुन तैयार भएनन् । अन्ततः उनीहरूलाई समुद्रमा डुबाइयो, जसको विवरण कुर्आन मजीदमा विभिन्न स्थानहरूमा विद्यमान छन् ।

[3]अर्थात् इस्राईलका सन्तानलाई जसलाई फ़िरऔनले दास बनाएर राखेको थियो । यसकारण वास्तवमा उनी मिश्रमा कमजोर ठानिन्थे किनभने उनी पराजित तथा दास थिए । परन्तु जब अल्लाहले चाहयो त त्यहीं पराजित तथा दास जातिलाई धर्तीको उत्तराधिकारी बनाइदियो । ﴿وَتُعِزُّ مَنْ تَشَاءُ وَتُذِلُّ مَنْ تَشَاءُ﴾ (सूरः आले-इमरान-२६)

[4]धर्तीसित तात्पर्य सीरियाको क्षेत्र फिलिस्तीन हो, जहाँ अल्लाह तआलाले अमालकः पश्चात इस्राईलका सन्तानलाई विजय प्रदान गऱ्यो । सीरियामा इस्राईलका सन्तान आदरणीय मूसा तथा हारूनको देहान्त पश्चात त्यस समय गए जब आदरणीय यूशआ बिन नूनले अमालकःलाई पराजित गरी इस्राईलका सन्तानका लागि मार्ग प्रशस्त गरिदिए । तथा धर्तीको त्यस भागमा अल्लाहको कृपा रहयो, अर्थात् सीरियाको

بَنِيٓ إِسۡرَٰٓءِيلَ بِمَا صَبَرُواْۖ وَدَمَّرۡنَا مَا كَانَ يَصۡنَعُ فِرۡعَوۡنُ وَقَوۡمُهُۥ وَمَا كَانُواْ يَعۡرِشُونَ ١٣٧

शुभ वचन बनी इस्राईलका विषयमा उनको सहनशीलताका कारण पूरा भयो[1] तथा हामीले फ़िरऔन एवं त्यसका निर्मित उद्योगहरूलाई तथा जुन उच्च भवन निर्माण गर्दथे सबैलाई विनष्ट गरिदियौं ।[2]

وَجَٰوَزۡنَا بِبَنِيٓ إِسۡرَٰٓءِيلَ ٱلۡبَحۡرَ فَأَتَوۡاْ عَلَىٰ قَوۡمٖ يَعۡكُفُونَ عَلَىٰٓ أَصۡنَامٖ لَّهُمۡۚ قَالُواْ يَٰمُوسَى

(१३८) तथा हामीले बनू इस्राईल (इस्राईलका पुत्रहरू) लाई समुद्र पारी तारिदियौं । अनि उनी एउटा जातिबाट गुज्रे जुन आफ्ना केही बुतहरू (प्रतिमाहरू) नजिक बसेका थिए । भन्नलागे

क्षेत्रमा जुन अधिकतर नबीहरूको निवास स्थान तथा समाधि स्थली रह्यो, तथा भौतिक सुख सम्पन्नता एवं खुशहालीमा पनि श्रेष्ठ रहेको छ । अर्थात् भौतिक तथा अलौकिक दुबै प्रकारका विभूतिहरूसित त्यो धर्ती मालामाल रहेको छ । मशारिक अरबी भाषामा मश्रिक् तथा मग़ारिब मग़रिबको बहुवचन हो । यद्यपि पूर्व तथा पश्चिम एक-एक नै हुन् । बहुवचन सित तात्पर्य समृद्धिशाली धर्तीका पूर्वी तथा पश्चिमी भाग हुन् अर्थात् पूर्व तथा पश्चिम दिशा ।

[1]यो वचन त्यही हो जुन आदरणीय मूसाको मुखबाट यसभन्दा पूर्व आयत संख्या १२८ तथा १२९ मा गरिएको छ । तथा सूरः क़ससमा पनि

﴿وَنُرِيدُ أَن نَّمُنَّ عَلَى ٱلَّذِينَ ٱسۡتُضۡعِفُواْ فِي ٱلۡأَرۡضِ وَنَجۡعَلَهُمۡ أَئِمَّةٗ وَنَجۡعَلَهُمُ ٱلۡوَٰرِثِينَ ۞ وَنُمَكِّنَ لَهُمۡ فِي ٱلۡأَرۡضِ وَنُرِيَ فِرۡعَوۡنَ وَهَٰمَٰنَ وَجُنُودَهُمَا مِنۡهُم مَّا كَانُواْ يَحۡذَرُونَ﴾

"हामी चाहन्छौं कि उनीमाथि उपकार गरौं जो धर्तीमा कमजोर ठानिन्छन् तथा उनलाई नेतृत्व प्रदान गरौं तथा राज्यको उत्तराधिकारी बनाऔं तथा राज्यमा उनीहरूलाई शक्ति तथा समृद्धि प्रदान गरौं तथा फ़िरऔन तथा हामान तथा उनको सेनालाई त्यो राज देखाइदेऊ जसबाट उनीहरू तर्सन्छन् ।" (सूरः अल-क़सस-५ तथा ६) तथा यो कृपा र उपकार त्यस धैर्यको कारण भयो जसको प्रदर्शन उनीहरूले फ़िरऔनको अत्याचारलाई सहन गरेर गरे ।

[2]उद्योगसित तात्पर्य कलक़ारखाना, भवन तथा हथियार आदि हुन् तथा (يَعۡرِشُون) "जुन उनी उच्च उठाउँदथ" सित तात्पर्य अग्ला-अग्ला भवन पनि हुन सक्दछन् । तथा अंगुर आदि लताहरू पनि जुन उनीहरू छानाहरूमा फैलाउँथे । अर्थ यो भयो कि उनका शहरहरूका अग्ला-अग्ला भवन, उद्योग, हतियार तथा अन्य सामान पनि नष्ट गरियो तथा उनका बगैंचाहरू पनि ।

اجْعَل لَّنَآ إِلَٰهًا كَمَا لَهُمْ ءَالِهَةٌ ۚ قَالَ إِنَّكُمْ قَوْمٌ تَجْهَلُونَ ﴿١٣٨﴾

कि हे मूसा ! हाम्रो लागि पनि एउटा यस्तो नै पूज्य निर्धारित गरिदिनुस् जस्तो उनको लागि यो देवता छ उनले भने वास्तवमा तिमीहरूमा ठूलो मूर्खता छ ।[1]

إِنَّ هَٰٓؤُلَآءِ مُتَبَّرٌ مَّا هُمْ فِيهِ وَبَٰطِلٌ مَّا كَانُوا۟ يَعْمَلُونَ ﴿١٣٩﴾

(१३९) यिनीहरू जुन काममा लागेका छन् त्यो नाश गरिदिइनेछ तथा उनको यो काम मात्र निर्मूल छ ।[2]

قَالَ أَغَيْرَ ٱللَّهِ أَبْغِيكُمْ إِلَٰهًا وَهُوَ فَضَّلَكُمْ عَلَى ٱلْعَٰلَمِينَ ﴿١٤٠﴾

(१४०) भन्नुभयो कि के अल्लाह (परमेश्वर) बाहेक अरू कसैलाई तिम्रो पूज्य निर्धारित गरिदिऊ, उद्यपि उसले समस्त विश्व वासीहरूमाथि तिमीलाई प्रधानता दिएको छ ।[3]

وَإِذْ أَنجَيْنَٰكُم مِّنْ ءَالِ فِرْعَوْنَ يَسُومُونَكُمْ سُوٓءَ ٱلْعَذَابِ ۖ يُقَتِّلُونَ أَبْنَآءَكُمْ وَيَسْتَحْيُونَ نِسَآءَكُمْ ۚ وَفِى ذَٰلِكُم بَلَآءٌ

(१४१) तथा त्यो समय स्मरण गर जब हामीले तिमीलाई फ़िरऔनका अनुयायीहरूबाट बचायौं जो तिमीहरूलाई कडा यातना दिन्थे, तिम्रा पुत्रहरूलाई मार्दथे तथा तिम्रा नारीहरूलाई

[1]यसभन्दा ठूलो अज्ञानता तथा मूर्खता अरू के होला कि जुन अल्लाहले उनीहरूलाई फ़िरऔन जस्तो ठूलो शत्रुबाट न केवल स्वतन्त्रता प्रदान गऱ्यो बरू उनका आँखाहरूकै समक्ष उसलाई उसको सेनाका साथ डुबाइदियो तथा उनीहरूलाई चमत्कारिक रूपले समुद्र पार गराईदियो । उनीहरू समुद्रलाई तर्ने बित्तिकै अल्लाहलाई बिर्सेर स्वयं बनाएका देवता खोज्न लागे । भनिन्छ यी मूर्तिहरू गाईका आकृतिका थिए जुन पत्थरबाट बनाइएका थिए ।

[2]अर्थात् यी मूर्तिपूजकहरूको व्यवहारले तिमीलाई पनि धोकामा परिदिएको छ, उनका भाग्यमा विनाश तथा उनका कर्म व्यर्थ तथा हानिकारक छन् ।

[3]कि जुन अल्लाहले तिमीमाथि यति उपकार गऱ्यो तथा सम्पूर्ण जगतमाथि श्रेष्ठता प्रदान गऱ्यो, त्यसलाई छाडेर म तिम्रो लागि ढुङ्गाबाट निर्मित मूर्तिहरू खोजूँ ? अर्थात् यो कृतघ्नता तथा अनुपकार म कसरी गर्न सक्दछु ? आगामी आयतहरूमा केही अन्य उपकारहरूको चर्चा छ ।

مِّن رَّبِّكُمْ عَظِيمٌ ﴿١٤١﴾

जीवित छाडिदिन्थे तथा यसमा तिम्रो पालनकर्तातिरबाट ठूलो परीक्षा थियो ।[1]

وَوَٰعَدْنَا مُوسَىٰ ثَلَٰثِينَ لَيْلَةً وَأَتْمَمْنَٰهَا بِعَشْرٍ فَتَمَّ مِيقَٰتُ رَبِّهِۦٓ أَرْبَعِينَ لَيْلَةً ۚ وَقَالَ مُوسَىٰ لِأَخِيهِ هَٰرُونَ ٱخْلُفْنِى فِى قَوْمِى وَأَصْلِحْ وَلَا تَتَّبِعْ سَبِيلَ ٱلْمُفْسِدِينَ ﴿١٤٢﴾

(१४२) तथा हामीले मूसालाई तीस रात्रिको वचन दियौं तथा दस रात्रि बढाएर त्यसलाई पुरा गऱ्यौं यसप्रकार उनको पोषकको समय पूरा चालीस रात्रिको भयो[2] तथा मूसाले आफ्नो भाई हारूनसित भने, म (गइसके) पश्चात मेरो कौममा मेरो प्रतिनिधित्व गर्नू एवं सुधार गरिराख्नु तथा उपद्रवीहरूको मार्गको अनुसरण नगर्नू ।[3]

وَلَمَّا جَآءَ مُوسَىٰ لِمِيقَٰتِنَا وَكَلَّمَهُۥ رَبُّهُۥ قَالَ رَبِّ أَرِنِىٓ أَنظُرْ إِلَيْكَ ۚ قَالَ لَن تَرَىٰنِى وَلَٰكِنِ ٱنظُرْ إِلَى ٱلْجَبَلِ فَإِنِ ٱسْتَقَرَّ

(१४३) तथा जब मूसा हाम्रो निश्चित गरिएको समयमा आइपुगे र उनको पोषकले उनीसित कुरा गऱ्यो तब उनले विनय गरे कि हे मेरो पोषक ! मलाई आफ्नो दर्शन गराइदेउ म तिमीलाई एकछिन हेर्न चाहन्छु । आदेश भयो कि तिमीले मलाई कदापि

[1]यी तीनै परीक्षा हुन्, जसको चर्चा सूर: अल-बकर:मा आइसकेको छ तथा सूर: इब्राहीममा पनि आउनेछ ।

[2]फ़िरऔन तथा त्यसको सेनालाई डुबाएर नष्ट गरिदिए पश्चात यो आवश्यकता प्रतीत भयो कि इस्राईलका सन्तानको मार्गदर्शन तथा निर्देशनको लागि कुनै किताव प्रदान गरियोस् । अत: अल्लाह तआलाले आदरणीय मूसालाई तूर पर्वतमा तीस रात्रिको लागि बोलायो जसमा दस रात्रि अरू बढाएर गरियो । आदरणीय मूसाले जाँदाखेरि आदरणीय हारूनलाई जो उनका भाई थिए तथा नबी पनि आफ्नो उत्तरदायी नियुक्त गरे ताकि उनी इस्राईलका सन्तानलाई मार्गदर्शन तथा सुधारको कार्य गरिराखून् तथा उनीहरूलाई हरेक प्रकारको उपद्रव तथा षड्यन्त्रबाट बचाऊन् । यस आयतमा यही नै वर्णन गरिएको छ ।

[3]आदरणीय हारून स्वयं नबी थिए, सुधार गर्नु उनको उत्तरदायित्वमा सम्मिलित थियो, आदरणीय मूसाले मात्र चेतावनी तथा सावधानीका लागि शिक्षा दिए । यहाँ मीकातसित तात्पर्य निर्धारित समय हो ।

مَكَانَهٗ فَسَوْفَ تَرٰىنِيْ ۚ فَلَمَّا تَجَلّٰى رَبُّهٗ لِلْجَبَلِ جَعَلَهٗ دَكًّا وَّخَرَّ مُوْسٰى صَعِقًا ۚ فَلَمَّآ اَفَاقَ قَالَ سُبْحٰنَكَ تُبْتُ اِلَيْكَ وَاَنَا اَوَّلُ الْمُؤْمِنِيْنَ ﴿۱۴۳﴾

हेर्नसक्ने छैनौं ।[1] तर तिमी यस पर्वततिर हेरिराख । यदि त्यो आफ्नो स्थानमा स्थिर रह्यो भने तिमीले पनि मलाई हेर्न सक्नेछौ, अनि उनको पोषकले जब त्यसमाथि प्रकाश गऱ्यो त तजल्ली (प्रकाश-आभा) ले त्यसलाई खण्डित गरिदियो एवं मूसा मूर्छित भई लडिहाले[2] अनि जब सचेत भए तब भने कि नि:सन्देह तपाईं पवित्र हुनुहुन्छ म तपाईंसित क्षमा याचना गर्दछु । तथा म सर्वप्रथम यसमा विश्वास गर्दछु ।[3]

[1]जब मूसा तूरमाथि गए तथा अल्लाहसित सोझो कुरा गरे त उनको हृदयमा अल्लाहको दर्शन गर्ने भावना उत्पन्न भयो तथा आफ्नो यस भावनालाई ﴿رَبِّ أَرِنِي﴾ भनेर व्यक्त गरे "तिमीले मलाई आफ्नो दर्शन गराइदेउ," उत्तर आयो ﴿لَن تَرَانِي﴾ "तिमी मलाई हेर्न सक्दैनौ," मुअ्तजिला (एउटा पथभ्रष्ट समुदाय) ले यसबाट तर्क गर्दै भन्यो कि (لَنْ) शब्द सधैं इन्कारको लागि आउँछ यसकारण अल्लाहको दर्शन न आलोक (लोक) मा सम्भव छ न परलोकमा । तर यो विचार सहीह हदीसहरूको विपरीत छ । लगातार सही विश्वस्त हदीसहरूबाट प्रमाणित छ कि परलोकमा निष्ठावानहरूले अल्लाहको दर्शन गर्नेछन् तथा स्वर्गमा पनि अल्लाहको दर्शनबाट सम्मानित हुनेछन्, सबै अहले सुन्नतको यही विश्वास छ तथा यस दर्शनको नकारको सम्बन्ध मात्र यस संसार (लोक) सित छ । कुनै मानवीय आँखा संसारमा अल्लाहको दर्शनको सामर्थ्य राख्दैन, तर परलोकमा अल्लाह यी आँखाहरूमा यति शक्ति उत्पन्न गरिदिनेछ कि तिनले परम अल्लाहको प्रकाशलाई सहन गर्न सक्नेछन् ।

[2]अर्थात त्यो पर्वत पनि प्रभुको ज्योतिलाई सहन गर्न सकेन तथा मूसा मूर्छित भई लडिहाले । हदीसमा चर्चित छ कि केयामतका दिन सबै मानिसहरू मूर्छित हुनेछन् (इमाम इब्ने कसीरको अनुसार यो मूर्छा प्रलयको मैदानमा त्यस समय हुनेछ जब अल्लाह तआला निर्णय गर्नको लागि प्रकट हुनेछ ।) तथा जब चेतना आउनेछ त म सर्वप्रथम त्यसबेला चेतनाशक्ति प्राप्त गर्नेमध्ये हुनेछु, म देख्नेछु कि आदरणीय मूसा अर्शको स्तम्भ समाति उभेका छन्, मलाई यो ज्ञान छैन कि उनी म भन्दा पूर्व चेतनामा आए अथवा उनलाई तूर पर्वतको मूर्छाको परिणामस्वरूप प्रलयको मूर्छाबाट पृथक राखियो (सहीह बुखारी तफ़सीर सूर: अल-आराफ, सहीह मुस्लिम बाब फज़ाएले मूसा अलैहिस्सलाम)

[3]तिम्रो महानता तथा श्रेष्ठताको एवं यस कुराको कि म तिम्रो शक्तिहीन भक्त हूँ । संसारमा तिम्रो दर्शनको शक्ति पनि छैन ।

قَالَ يٰمُوْسٰٓى اِنِّى اصْطَفَيْتُكَ عَلَى النَّاسِ بِرِسٰلٰتِىْ وَبِكَلَامِىْ ۖ فَخُذْ مَآ اٰتَيْتُكَ وَكُنْ مِّنَ الشّٰكِرِيْنَ ﴿١٤٤﴾

(१४४) आदेश भयो कि, हे मूसा ! मैले आफ्नो दूतत्व एवं आफूसँग वार्तालापबाट अन्य मानिसहरूमाथि तिमीलाई विशेषता दिएको छु। तसर्थ जे-जति मैले तिमीलाई प्रदान गरेको छु त्यसलाई ग्रहण गर एवं कृतज्ञता प्रकट गर ।[1]

وَكَتَبْنَا لَهٗ فِى الْاَلْوَاحِ مِنْ كُلِّ شَىْءٍ مَّوْعِظَةً وَّتَفْصِيْلًا لِّكُلِّ شَىْءٍ ۚ فَخُذْهَا بِقُوَّةٍ وَّاْمُرْ قَوْمَكَ يَاْخُذُوْا بِاَحْسَنِهَا ۚ سَاُورِيْكُمْ دَارَ الْفٰسِقِيْنَ ﴿١٤٥﴾

(१४५) र हामीले त्यसको लागि तख्तीहरूमा उपदेशको रूपमा हरेक प्रकारको शिक्षा र हरेक प्रकारको कुराको विस्तृत वर्णन लेखिदियौं,[२] तिमी उनलाई पूरा शक्तिले समात तथा आफ्ना जातिलाई आदेश गर कि उनका उत्तम आदेशहरूमा कार्यरत होऊन्,[३] अब अति शीघ्र तिमीलाई ती अवज्ञाकारीहरूको स्थान (घर) देखाउनेछु ।[४]

سَاَصْرِفُ عَنْ اٰيٰتِىَ الَّذِيْنَ يَتَكَبَّرُوْنَ فِى الْاَرْضِ بِغَيْرِ الْحَقِّ ۗ وَاِنْ يَّرَوْا كُلَّ اٰيَةٍ لَّا يُؤْمِنُوْا بِهَا ۚ

(१४६ म यस्तालाई आफ्ना आयतहरूबाट विमुख नै राख्नेछु जो संसारमा अभिमान गर्दछन् जसको उनलाई कुनै अधिकार छैन यदि उनीहरू सबै निशानीहरू (लक्षण) हेरि पनि हाल्छन्

[1]यो अल्लाह तआलासित वार्ताको दोस्रो अवसर थियो जसबाट आदरणीय मूसालाई सम्मानित गरियो । यसभन्दा पूर्व जब आगो लिन गएका थिए, तब अल्लाह तआलासित वार्तालाप भएको थियो तथा दूतत्व प्रदान गरिएको थियो ।

[२]अर्थात् तौरात तख्तीहरू (पट्टीका) को रूपमा प्रदान गरिएको थियो, जसमा उनका लागि धार्मिक आदेश थिए, भन्न तथा गर्न एवं शिक्षा-दीक्षाको पूर्ण विवरण थियो ।

[३]अर्थात् छुटको खोजीमा न रह, जस्तो कि अल्छीहरूको दशा हुन्छ ।

[४](دار) (द्वार) सित तात्पर्य या त परिणाम अर्थात् विनाश हो अथवा यसबाट तात्पर्य यो हो कि दूराचारीहरूको देशमाथि तिमीलाई राज दिनेछु तथा यसबाट तात्पर्य सीरिया देश हो जसमाथि त्यसबेला अमालिकाको राज्य थियो जो अल्लाहका अवज्ञाकारी थिए ।

وَإِنْ يَرَوْا سَبِيلَ الرُّشْدِ لَا يَتَّخِذُوهُ سَبِيلًا ۚ وَإِنْ يَرَوْا سَبِيلَ الْغَيِّ يَتَّخِذُوهُ سَبِيلًا ۚ ذَٰلِكَ بِأَنَّهُمْ كَذَّبُوا بِآيَاتِنَا وَكَانُوا عَنْهَا غَافِلِينَ ﴿١٤٦﴾

तैपनि त्यसमा विश्वास गर्ने छैनन् ।[1] तथा यदि उनी सत्य मार्गको दर्शन गर्छन भने पनि त्यसलाई आफ्नो मार्ग बनाउँदैनन् र यदि उनी कुमार्गलाई देख्छन् भने त्यसलाई आफ्नो मार्ग बनाउनेछन् ।[2] यो यसकारण हो कि उनीहरूले हाम्रा आयतहरूलाई झुठ्लाए तथा तिनीबाट अचेत रहे ।[3]

[1]गर्वको अर्थ हो कि अल्लाहका आयत तथा आदेशहरूको तुलनामा आफूलाई श्रेष्ठ ठान्नु तथा अन्य मानिसहरूलाई हीन ठान्नु । यो गर्व मनुष्यलाई शोभा दिँदैन, किनभने अल्लाह स्रष्टा हो तथा त्यो उसको सृष्टि । सृष्टि भई स्रष्टासित तुलना गर्नु तथा त्यसका आदेशहरूको अवहेलना तथा असावधानी कुनै प्रकारले पनि उचित छैन । यसकारण गर्व अल्लाहलाई कदापि प्रिय छैन । यस आयतमा गर्वको परिणाम भनिएको छ कि अल्लाह तआला उनीहरूलाई आफ्ना आयतहरूबाट टाढा नै राख्दछ तथा पछि उनीहरू यति टाढा हुन जान्छन् कि कुनै पनि प्रकारको निशानी उनीहरूलाई सत्यतिर बोलाउन सफल हुँदैन । जस्तो कि अन्य स्थानमा आदेश छ:

﴿إِنَّ الَّذِينَ حَقَّتْ عَلَيْهِمْ كَلِمَتُ رَبِّكَ لَا يُؤْمِنُونَ ۞ وَلَوْ جَاءَتْهُمْ كُلُّ آيَةٍ حَتَّىٰ يَرَوُا الْعَذَابَ الْأَلِيمَ﴾

"जसमाथि तिम्रो प्रभुको कुरा सिद्ध भयो, उनीहरू ईमान क़ायम गर्ने छैनन्, चाहे उनको पासमा हरेक प्रकारका निशानीहरू किन न आईहालून् । यहाँसम्मकि उनीहरू दुःखदायी यातनाहरू देखिहालुन् ।" (सूरः यूनुस-९६ तथा ९७)

[2]यसमा अल्लाहका आदेशहरूको अवहेलना गर्नेहरूको एउटा अरू चरित्र तथा व्यवहारको वर्णन गरिएको छ कि मार्गदर्शनको कुनै कुरा उनको समक्ष आएपनि त्यसलाई मान्दैनन् तर भ्रष्ट हुने कुनै कुरा देख्दछन् त त्यसलाई तुरून्त अपनाउँछन् । कुरआन करीमको यस वर्णनको दर्शन हरेक कालमा गर्न सकिन्छ । आज हामी पनि प्रत्येक स्थान एवं प्रत्येक समाजमा यहाँसम्मकि मुस्लिम समुदायमा पनि यही सब कुराहरू देखिराखेका छौं कि पुण्यको तिरस्कार भइराखेको छ तथा नराम्रो कुरोलाई हरेक व्यक्तिले अपनाइराखेको छ ।

[3]यो यस कुराको कारण भनिंदैछ कि मानिसहरू पुण्यको सट्टा पाप तथा सत्यको अपेक्षा असत्यको मार्ग किन धेरै अपनाउँछन् ? यो कारण हो अल्लाहका आयतहरूलाई झुठ्लाउनु तथा तिनीप्रति असावधानी एवं अवहेलना गर्नु । यो प्रत्येक समाजमा सामान्य रूपले व्याप्त छ ।

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا وَلِقَاءِ الْآخِرَةِ حَبِطَتْ أَعْمَالُهُمْ ۚ هَلْ يُجْزَوْنَ إِلَّا مَا كَانُوا يَعْمَلُونَ ﴿١٤٧﴾

(१४७) तथा यिनीहरू जसले हाम्रा आयतहरूलाई एवं प्रलयका दिनलाई झुठ्लाए, ती सबै व्यर्थ गए। उनीहरूलाई त्यसको यातना दिइनेछ, जुन यिनीहरूले गर्दथे ।[1]

وَاتَّخَذَ قَوْمُ مُوسَىٰ مِن بَعْدِهِ مِنْ حُلِيِّهِمْ عِجْلًا جَسَدًا لَّهُ خُوَارٌ ۚ أَلَمْ يَرَوْا أَنَّهُ لَا يُكَلِّمُهُمْ وَلَا يَهْدِيهِمْ سَبِيلًا ۘ اتَّخَذُوهُ وَكَانُوا ظَالِمِينَ ﴿١٤٨﴾

(१४८) तथा मूसाका अनुयायीहरूले उनको पश्चात आफ्ना आभूषणहरूबाट एउटा बाछो बनाएर एउटा देवता बनाए जुन एउटा ढाँचा थियो जसमा एउटा ध्वनि थियो । के उनीहरूले यो देखेनन् कि त्यसले उनीहरूसित कुरा गर्न सक्दैनथ्यो तथा न उनलाई कुनै मार्ग भन्न सक्थ्यो, त्यसलाई उनीहरूले (देवता) बनाए तथा बडो अन्यायको काम गरे ।[2]

[1]यसमा अल्लाहका आयतहरूलाई झुठ्लाउने तथा आख़िरतलाई अस्वीकार गर्नेहरूको परिणाम भनिएको छ। कर्महरूको आधार न्याय तथा सत्य होइन, बरू अत्याचार तथा उनको असत्य हो, यसकारण उनको कर्म पत्रमा पाप मात्र हुनेछ, जसको अल्लाह तआला कहाँ कुनै मूल्य हुनेछैन । हो उनको यस पत्रको प्रतिफल त्यहाँ अवश्य दिइनेछ ।

[2]मूसा अलैहिस्सलाम जब चालिस रात्रिहरूका लागि तूर पर्वतमा गए, त सामरी नामक व्यक्तिले सुनका आभूषण एकत्र गरी एउटा बाछो तयार गऱ्यो, जसमा उसले जिब्रीलका घोडाको खुरको माटो पनि, जुन उसले सुरक्षित रूपमा राखेको थियो, त्यसमा सम्मिलित गरिदियो, जसमा अल्लाह तआलाले जीवनको प्रभाव राखेको थियो, जसको कारण बाछो केही गोरूको ध्वनि निकालथ्यो (यद्यपि स्पष्ट वार्ता गर्न तथा मार्गदर्शन गर्नबाट विवश थियो, जस्तो कि कुर्आनका शब्दहरूबाट स्पष्ट हुन्छ) यसमा मतभेद छ कि त्यो हाडमासुको बाछो बन्यो, अथवा त्यो सुनको नै परन्तु कुनै प्रकारले त्यसमा वायु प्रवेश गर्दथ्यो अनि गाई गोरूको जस्तो आवाज त्यसबाट निस्कन्थ्यो । (इब्ने कसीर) यस ध्वनिको आधारमा सामरीले इस्राईलका सन्तानलाई भ्रमित पाऱ्यो कि तिम्रो देवता त यो हो, मूसा बिर्सेका छन् तथा उनी देवताको खोजीमा तूर पर्वतमा गएका छन् । (यो घटना सूरः ताहामा आउनेछ)

وَلَمَّا سُقِطَ فِيٓ أَيۡدِيهِمۡ وَرَأَوۡاْ أَنَّهُمۡ قَدۡ ضَلُّواْ قَالُواْ لَئِن لَّمۡ يَرۡحَمۡنَا رَبُّنَا وَيَغۡفِرۡ لَنَا لَنَكُونَنَّ مِنَ ٱلۡخَٰسِرِينَ ١٤٩

(१४९) तथा जब लज्जित भए[१] एवं ज्ञान भयो कि वास्तवमा उनीहरू बिचलनमा परे, तब भन्नलागे कि यदि हाम्रो पोषकले हामीमाथि कृपा गर्दैन तथा हाम्रो पाप क्षमा गर्दैन भने हामी हानिमा पर्नेहरूमध्ये हुनेछौ ।

وَلَمَّا رَجَعَ مُوسَىٰٓ إِلَىٰ قَوۡمِهِۦ غَضۡبَٰنَ أَسِفٗا قَالَ بِئۡسَمَا خَلَفۡتُمُونِي مِنۢ بَعۡدِيٓۖ أَعَجِلۡتُمۡ أَمۡرَ رَبِّكُمۡۖ وَأَلۡقَى ٱلۡأَلۡوَاحَ وَأَخَذَ بِرَأۡسِ أَخِيهِ يَجُرُّهُۥٓ إِلَيۡهِۚ قَالَ ٱبۡنَ أُمَّ إِنَّ ٱلۡقَوۡمَ ٱسۡتَضۡعَفُونِي وَكَادُواْ يَقۡتُلُونَنِي فَلَا

(१५०) तथा जब मूसा क्रोध तथा क्षोभको अवस्थामा आफ्नो सम्प्रदाय (क़ौम) तिर फर्केर आए त भने कि तिमीले मेरो पछाडि मेरो ठाउँलाई नराम्रो पारेका छौ । के आफ्नो प्रभुको आदेशभन्दा अघिनै तिमीले शीघ्रता गर्‍यौ तथा शीघ्रताले पट्टिकाहरूलाई एकातिर फालिदियो ।[२] तथा आफ्नो भाई हारूनको टाउको समातेर आफुतिर तान्नथाले । हारूनले भने कि हे मेरी आमाबाट जन्मेका ![३] यिनीहरूले मलाई कमजोर ठाने ।

[१](سُقِطَ فِي أَيْدِيهِم) यो एउटा वाकशैली हो, जसको अर्थ लज्जित हुनु हो, यो लज्जा मूसा अलैहिस्सलाम फर्केर आएपछि भयो जब उनी आएर यसमाथि गाली गरे तथा झपारे जस्तो सूर: ताहामा आउनेछ । यहाँ यसलाई यसकारण पहिला ल्याइएको छ कि उनको कथनी करनी एकत्रित होस् । (फ़तहुल क़दीर)

[२]जब आदरणीय मूसाले आएर हेरे कि उनीहरू बाछोको पूजामा लीन छन्, तब अत्याधिक क्रोधित भए तथा शीघ्रतामा पट्टीकाहरू, जुन तूर पर्वतबाट ल्याएका थिए, यसप्रकार राखे कि हेर्नेवालाहरूलाई प्रतीत भयो कि उनले तल फ्याँकिदिनु भएको छ, जसलाई कुरआनले “राखिदिनु भयो” सित तुलना गरेको छ, तैपनि यदि फ्याँकिदिनु भएको हो, भने यसमा अनादर थिएन किनभने उनको विचार पट्टिकाहरूको अनादर गर्नु थिएन, बरू धार्मिक मान-मर्यादामा लीन भएर अप्रत्याशित रूपले उनीबाट यो काम भयो ।

[३]आदरणीय हारून तथा मूसा साखै भाई थिए, तर यहाँ आदरणीय हारूनले “आमाबाट जन्मेका” यसकारण भने कि यी शब्दहरूमा प्रेम तथा कोमलताको पक्ष धेरै छ ।

تُشْمِتْ بِيَ الْأَعْدَاءَ وَلَا تَجْعَلْنِي مَعَ الْقَوْمِ الظَّالِمِينَ ﴿١٥٠﴾

तथा निकट थियो कि मेरो हत्या गरिदिन्थे ।[1] अतः शत्रुहरूलाई ममाथि हाँस्ने अवसर नदेउ ।[2] तथा मलाई यी अत्याचारीहरूको श्रेणीमा नगन ।[3]

قَالَ رَبِّ اغْفِرْ لِي وَلِأَخِي وَأَدْخِلْنَا فِي رَحْمَتِكَ ۖ وَأَنتَ أَرْحَمُ الرَّاحِمِينَ ﴿١٥١﴾

(१५१) (मूसाले) भने हे मेरो पोषक ! मेरो त्रुटिहरूलाई क्षमा गर तथा मेरो भाईका त्रुटिहरू पनि तथा हामी दुबैलाई आफ्नो कृपा परिधिमा सम्मिलित गर तथा तिमी कृपा गर्नेहरूमा सर्वाधिक कृपालु हौ ।

إِنَّ الَّذِينَ اتَّخَذُوا الْعِجْلَ سَيَنَالُهُمْ غَضَبٌ مِّن رَّبِّهِمْ وَذِلَّةٌ فِي الْحَيَاةِ الدُّنْيَا ۚ وَكَذَٰلِكَ

(१५२) निःसन्देह जसले बाछोको पूजा गरेका छन्, उनीमाथि छिटै उनको प्रभुको तर्फबाट क्रोध तथा अपमान यस संसारिक जीवनमा

[1]आदरणीय हारूनले आफ्नो तर्क यो प्रस्तुत गरे जसको कारण उनी आफ्नो सम्प्रदायलाई मिश्रणवाद जस्तो महापापबाट रोक्नमा असफल रहे । एउटा आफ्नो क्षीणता तथा दोस्रो इस्राईलका सन्तानको उपद्रव तथा सीमा उल्लंघन कि उनीहरू उनको हत्या गरिदिन तयार थिए तथा उनी आफ्नो जीवनको रक्षाको लागि मौन रहनु पऱ्यो जसको आज्ञा अल्लाहले यस्ता अवसरहरूमा प्रदान गरेको छ ।

[2]मेरै भर्त्सनाबाट शत्रु प्रसन्न हुनेछन्, जबकि यो अवसर त शत्रुहरूको टाउको कुल्चिने तथा उनीबाट आफ्नो सम्प्रदायलाई बचाउनु हो ।

[3]तथा त्यसो पनि विश्वास तथा कर्मको आधारमा मलाई उनको श्रेणीमा कसरी सम्मिलित गर्न सकिन्छ ? मैले न शिर्क गरें न यसको आज्ञा दिएँ, न यसमाथि प्रसन्न भएँ, मात्र मौन रहें तथा यसको लागि मसित समुचित तर्क छ, अनि मेरो गणना अत्याचारीहरू (बहुदेववादीहरू) सँग कुन प्रकारले हुनसक्छ ? अतः आदरणीय मूसाले आफ्नो तथा आफ्नो भाई हारूनको लागि क्षमा तथा कृपाको लागि प्रार्थना गरे ।

نَجْزِي الْمُفْتَرِينَ ﴿١٥٢﴾

नै आइपर्नेछ ।[१] तथा हामी मिथ्यारोपीहरूलाई यस्तै दण्ड दिन्छौं ।[२]

وَالَّذِينَ عَمِلُوا السَّيِّئَاتِ ثُمَّ تَابُوا مِنْ بَعْدِهَا وَآمَنُوا إِنَّ رَبَّكَ مِنْ بَعْدِهَا لَغَفُورٌ رَّحِيمٌ ﴿١٥٣﴾

(१५३) तथा जसले पापका कर्म गरे अनि उनी त्यस पश्चात तिनका लागि क्षमा माँगे तथा ईमान स्थापित गरे त तिम्रो प्रभु त्यस क्षमाको पश्चात पाप क्षमा गरिदिने कृपालु हो ।[३]

وَلَمَّا سَكَتَ عَن مُّوسَى الْغَضَبُ أَخَذَ الْأَلْوَاحَ ۖ وَفِي نُسْخَتِهَا هُدًى وَرَحْمَةٌ لِّلَّذِينَ هُمْ لِرَبِّهِمْ يَرْهَبُونَ ﴿١٥٤﴾

(१५४) तथा जब मूसाको क्रोध शान्त भयो तब उनले ती पट्टिकाहरूलाई टिपे । तिनका लेखहरूमा[४] त्यसताको लागि, जो आफ्नो प्रभुसित तर्सन्थे, मार्गदर्शनको निर्देश तथा कृपा थिए ।[५]

[१]अल्लाहको प्रकोप यो थियो कि क्षमाको लागि वध आवश्यक गरियो, तथा यसभन्दा पूर्व जबसम्म जीवित रहन्छ अपमान तथा निन्दाका अधिकारी रहोस् ।

[२]तथा यो दण्ड विशेषरूपले उनैको लागि होइन, जो पनि अल्लाहमाथि मिथ्यारोपण गर्दछ, उसलाई हामी यही दण्ड दिन्छौं ।

[३]हो, जसले क्षमा मागे, उनका लागि अल्लाह तआला क्षमावान कृपालु छ, ज्ञात भयो कि क्षमा माँग्नाले हरेक पाप क्षमा हुन्छ, परन्तु यो क्षमा शुद्ध हृदयले माँगियोस् ।

[४] (نُسْخَةٌ) (नुस्ख:) शब्द (फुअल:) को समतुल्य कारकको अर्थमा छ । यो त्यस मूललाई पनि भन्दछन् जसबाट अनुकृत गरिन्छ तथा प्रतिलिपिलाई पनि नुस्ख: भन्दछन् । यहाँ नुस्ख:सित तात्पर्य या त ती मूल पट्टिकाहरू हुन, जसमा तौरात लेखिएको थियो, अथवा यसबाट तात्पर्य त्यो अर्को नुस्ख: हुनसक्छ, जुन पट्टिकाहरू जोडसित फ्याँक्नुको कारण भाँचिए पश्चात अनुकृत गरी तैयार गरिएको थियो । तैपनि उचित कुरो पहिलो नै लाग्दछ किनभने अगाडि गएर चर्चा छ कि आदरणीय मूसाले ती पट्टिकाहरूलाई टिपे । जसबाट ज्ञात हुन्छ कि पट्टिकाहरू भाँचिएका थिएनन्, अत: यसको मुख्य उद्देश्य "विषय" हो, जुन अनुवादमा लिइएको छ ।

[५]तौरातलाई पनि, कुर्‌आन जस्तै, उनीहरूकै लागि मार्गदर्शन तथा कृपा भनिएको छ, जो अल्लाहसित तर्सन्छन्, किनभने मुख्य लाभ आकाश शास्त्रहरूको उनीहरूलाई नै हुन्छ ।

وَاخۡتَارَ مُوۡسٰی قَوۡمَهٗ سَبۡعِيۡنَ رَجُلًا لِّمِيۡقَاتِنَا ۚ فَلَمَّاۤ اَخَذَتۡهُمُ الرَّجۡفَةُ قَالَ رَبِّ لَوۡ شِئۡتَ اَهۡلَكۡتَهُمۡ مِّنۡ قَبۡلُ وَاِيَّایَ ؕ اَتُهۡلِكُنَا بِمَا فَعَلَ السُّفَهَآءُ مِنَّا ۚ اِنۡ هِیَ اِلَّا فِتۡنَتُكَ ؕ تُضِلُّ بِهَا مَنۡ تَشَآءُ وَتَهۡدِیۡ مَنۡ تَشَآءُ ؕ اَنۡتَ وَلِيُّنَا فَاغۡفِرۡ لَنَا وَارۡحَمۡنَا وَاَنۡتَ خَيۡرُ الۡغٰفِرِيۡنَ ﴿۱۵۵﴾

(१५५) तथा मूसाले सत्तरी व्यक्तिलाई आफ्नो समुदायमध्ये हाम्रो निर्धारित समयको लागि घोषित गरे, अनि जब उनीहरूलाई भूकम्पले आई समात्यो[1] तब मूसाले बिन्ती गर्न लागे कि हे हाम्रो प्रभु ! यदि तिमीले चाहेको भए अघि नै यिनलाई र मलाई विनष्ट गरिदिन्थ्यौ, के तिमीले हामीमध्ये केही मूर्खहरूका कारण सबैलाई नाश गरिदिन्छौ ? यो घटना मात्र तिमीबाट एउटा परीक्षा हो । यस्ता परीक्षाहरूबाट तिमी जसलाई चाहे पथभ्रष्ट पार्न सक्छौ, जसलाई चाहे मार्गदर्शन दिन सक्छौ । तिमी नै हाम्रो संरक्षक हौ, अब हामीलाई क्षमा गर तथा कृपा गर तथा तिमी क्षमा गर्नेहरूमा सर्वोत्तम क्षमावान हौ ।[2]

अरूहरू त आफ्ना कानहरूलाई सत्य सुन्नुबाट, आँखाहरूलाई सत्यता देख्नबाट बन्द गरेका हुन्छन्, यसकारण उनीहरू कृपा स्रोतबाट सामान्यरूपले लाभ उठाउनबाट बञ्चित नै रहन्छन् ।

[1]यी सत्तरी व्यक्तिहरूको विस्तृत विवरण आगामी टिप्पणीमा आइराखेको छ । यहाँ यो भनिदैछ कि आदरणीय मूसाले आफ्ना सम्प्रदायहरू मध्ये सत्तरी व्यक्तिहरूको चयन गरे तथा उनीहरूलाई तूर पर्वतमा लगे, जहाँ यातनाको रूपमा मारियो, जसबारे आदरणीय मूसाले भने ............

[2]इस्राईलका सन्तानमा यी सत्तरी व्यक्ति को थिए ? यसमा व्याख्याकारहरूबीच मतभेद छ । एकमत यो छ कि जब आदरणीय मूसाले तौरातको आदेश उनीहरूलाई सुनाए त उनीहरूले भने कि हामीले कसरी विश्वास गरौं कि यो किताब वास्तवमा अल्लाहतिरबाट अवतरित गरिएको हो ? हामी त जबसम्म स्वयं अल्लाह तआलालाई वार्तालाप गरेको सुन्दैनौं, यसलाई मान्ने छैनौं । अत: उनले सत्तरी महात्माहरूको चयन गरे तथा उनीहरूलाई तूर पर्वतमा लगे । त्यहाँ अल्लाह तआलाले आदरणीय मूसासित वार्ता गर्‍यो, जसलाई उनीहरूले सुने । तर त्यहाँ उनीहरूले एउटा नयाँ माँग राखिहाले कि हामी जबसम्म अल्लाह तआलालाई आफ्ना आँखाले देख्दैनौं, विश्वास गर्नेछैनौं । दोस्रो मत यो हो कि यी सत्तरी व्यक्ति ती हुन् जो पुरै समुदायको तर्फबाट बाछोको पूजाको महापापबाट क्षमा-याचनाको लागि तूर पर्वतमा लगिएका थिए ।

وَاكْتُبْ لَنَا فِي هَٰذِهِ الدُّنْيَا حَسَنَةً وَفِي الْآخِرَةِ إِنَّا هُدْنَا إِلَيْكَ ۚ قَالَ عَذَابِي أُصِيبُ بِهِ مَنْ أَشَاءُ ۖ وَرَحْمَتِي وَسِعَتْ كُلَّ شَيْءٍ ۚ فَسَأَكْتُبُهَا لِلَّذِينَ يَتَّقُونَ وَيُؤْتُونَ الزَّكَاةَ وَالَّذِينَ هُم بِآيَاتِنَا يُؤْمِنُونَ ﴿١٥٦﴾

(१५६) तथा हामीहरूको नाममा यस संसारमा पनि भलाई (पुण्य) लेखिदेउ तथा परलोकमा पनि हामी तिमीतिरै ध्यान केन्द्रित गर्दछौं ।[1] अल्लाह (तआ़ला) भन्दछ कि म आफ्नो प्रकोप उसैमाथि घटित गर्दछु जसमाथि चाहन्छु। तथा मेरो कृपाको परिधिमा प्रत्येक वस्तु छ ।[2] तसर्थ त्यो कृपा उनीहरूको नाममा अवश्य लेख्नेछु जो अल्लाहसित तर्सन्छन् तथा ज़कात (धर्मदान)

तथा त्यहाँ गएर उनीहरूले अल्लाहलाई हेर्ने इच्छा व्यक्त गरे । तेस्रो मत यो हो कि यी सत्तरी व्यक्ति ती हुन्, जसले इस्राईलका सन्तानलाई बाछोको पूजा गरिराखेको देखे, तर उनीहरूले यसबाट रोकेनन् । चौथो मत यो हो कि यी सत्तरी व्यक्ति ती हुन्, जसलाई अल्लाह तआ़लाको आदेशमा तूर पर्वतमा लैजान छनौट गरिएको थियो । त्यहाँ गएर उनीहरूले अल्लाहसित प्रार्थना गरे, जसमा एउटा प्रार्थना यो पनि थियो कि "हे अल्लाह! तिमीले हामीलाई त्यो सबै कुरा प्रदान गर , जुन यसभन्दा पूर्व कसैलाई प्रदान गरेनौ तथा न त भविष्यमा कसैलाई प्रदान गर्नेछौ ।" अल्लाह तआ़लालाई यो प्रार्थना प्रिय लागेन, जसको कारण भूकम्प आयो तथा उनीहरू त्यसमा मरे । अधिकतर व्याख्याकार दोस्रो मतको पक्षमा छन् तथा त्यसलाई उनीहरूले त्यही घटना बताएका छन् जुन सूरः अल-बक़रःको आयत संख्या-५६ मा आएको छ, जहाँ उनीमाथि चट्याङ पर्नाले उनीहरूको मृत्यु हुनुको कारण वर्णित गरिएको छ । तथा यहाँ भूकम्पबाट मृत्युको वर्णन छ । यसको समर्थनमा यो भनिएको छ कि दुबै प्रकोप भएका हुन् अर्थात् माथिबाट चट्याङ तथा तलबाट भूकम्प । अतः आदरणीय मूसाको त्यस विनय निवेदनको पश्चात कि यदि उनलाई मर्नुनै थियो भने त्यसभन्दा पूर्व त्यस समय मार्दथ्यो जब यिनी बाछोको पूजा गर्दथे, अल्लाह तआ़लाले उनीहरूलाई पुनः जीवित गरिदियो ।

[1]अर्थात् क्षमा माँगदछन् ।

[2]यो उसको अपार कृपा नै त हो नि कि जसको कारण राम्रा-नराम्रा, ईमान भएका तथा क़ाफिर दुबै उसको कृपाबाट लाभान्वित भइराखेका छन् । हदीसमा वर्णित छ, "अल्लाह तआ़लाको दयाका सय भाग छन् । यो उसको दयाको नै भाग हो कि जसबाट सृष्टि एक-अर्कामाथि दया गर्दछ तथा नरभक्षी पशु आफ्ना बच्चाहरूमाथि दया प्रेम गर्दछन् तथा उसले दयाको उनानसय भाग आफ्नो पासमा राखेको छ । (सहीह मुस्लिम संख्या-२१०८ तथा इब्ने माजः संख्या-४२९३)

दिन्छन् तथा जो हाम्रा आयतहरू प्रति विश्वास गर्दछन् ।

(१५७) तथा जो यस्तो अनभिज्ञ ईशदूत (सांसारिक गुरूहरूद्वारा शिक्षा प्राप्त नगरेको) नबीको अनुसरण गर्दछन्, जसलाई उनीहरू आफ्नो पासमा भएको तौरात तथा इंजीलमा लेखिएको पाउँछन् ।[1] उनी तिनीहरूलाई पुण्यका कार्यहरूको आदेश गर्दछन् तथा पापका कार्यहरूबाट रोक्दछन् ।[2] तथा पवित्र पदार्थहरूलाई वैध (प्रयोग गर्न योग्य) भन्दछन् तथा अपवित्र (अशुद्ध) पदार्थहरूलाई निषेध (प्रयोग गर्नबाट रोक्न) भन्दछन् तथा ती मानिसहरूमाथि भार एवं घाटीको पासो थिए[3] तिनलाई हटाउछन् । अत: जो मानिसहरू

ٱلَّذِينَ يَتَّبِعُونَ ٱلرَّسُولَ ٱلنَّبِيَّ ٱلْأُمِّيَّ ٱلَّذِى يَجِدُونَهُۥ مَكْتُوبًا عِندَهُمْ فِى ٱلتَّوْرَىٰةِ وَٱلْإِنجِيلِ يَأْمُرُهُم بِٱلْمَعْرُوفِ وَيَنْهَىٰهُمْ عَنِ ٱلْمُنكَرِ وَيُحِلُّ لَهُمُ ٱلطَّيِّبَٰتِ وَيُحَرِّمُ عَلَيْهِمُ ٱلْخَبَٰٓئِثَ وَيَضَعُ عَنْهُمْ إِصْرَهُمْ وَٱلْأَغْلَٰلَ ٱلَّتِى كَانَتْ عَلَيْهِمْ ۚ فَٱلَّذِينَ ءَامَنُوا۟ بِهِۦ وَعَزَّرُوهُ وَنَصَرُوهُ وَٱتَّبَعُوا۟

[1]यो आयत पनि यस कुरोलाई स्पष्ट गर्नको निम्ति परम आवश्यक विशेषता राख्दछ कि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा विश्वास नगरीकन पारलौकिक मोक्ष सम्भव छैन तथा उचित एवं स्वीकार्य ईमान त्यही हो जसको विस्तृत विवरण महम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले गर्नुभएको छ । यस आयतबाट पनि "सर्व धर्म सम्भाव" को जरा काटिन्छ ।

[2]भलो (पुण्य) त्यो हो जसलाई धर्म विधानले भला भन्यो तथा नराम्रो (पाप) त्यो हो जसलाई धर्म विधानले अनुचित गरेको छ ।

[3]यी भार तथा पाँसा (फन्दा) ती हुन् जुन पहिलेका धर्महरूमा थिए कि जस्तै प्राणको बदला प्राण अनिवार्य थियो, दियत (रगतको मूल्य जुन मृतकहरूका उत्तराधिकारीद्वारा मागियोस् जुन दिनु पनि पर्ने हो अथवा क्षमा थिएन) अथवा जुन वस्त्रमा अपवित्र कुरो लाग्दथ्यो, त्यसको त्याग गर्नु आवश्यक थियो, इस्लामी धर्म नियमले यसलाई मात्र धुने उपदेश दियो । जुन प्रकार हत्याको बदलामा रगतको मुल्य माँग्न तथा क्षमा गर्नको अनुमति प्रदान गरेको छ आदि । तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि, "मलाई सरल एकेश्वरवादी धर्मका साथ पठाइएको छ ।" (मुसनद अहमद भाग-५, पृष्ठ २६६, भाग-६, पृष्ठ-११६ तथा २३३) तर दुर्भाग्यले यस समुदायले आफ्नो तर्फबाट रीति-रिवाजको बोझ आफूमाथि लादेको छ तथा अज्ञानताको पासो आफ्नो घाँटीको आभूषण बनाएको छ, जसबाट विवाह तथा शोक दुबै यातना बन्न गएका छन् ।

النُّوْرَ الَّذِيْٓ اُنْزِلَ مَعَهٗٓ ۙ اُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿۱۵۷﴾

यस नबीमा ईमान स्थापित गर्छन् तथा उनको समर्थन गर्छन् एवं उनको सहायता गर्दछन् तथा त्यस प्रकाशको अनुसरण गर्दछन्, जुन उनीसँग अवतरित भएको छ । त्यस्ता मानिसहरू पूर्ण सफलता प्राप्त गर्ने हुन् ।[1]

قُلْ يٰٓاَيُّهَا النَّاسُ اِنِّيْ رَسُوْلُ اللّٰهِ اِلَيْكُمْ جَمِيْعَا ۨالَّذِيْ لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ لَآ اِلٰهَ اِلَّا هُوَ يُحْيٖ وَيُمِيْتُ ۠ فَاٰمِنُوْا بِاللّٰهِ وَرَسُوْلِهِ النَّبِيِّ الْاُمِّيِّ

(१५८) (तपाईं) भनिदिनुस् कि हे मानिसहरू ! म तिमी सबैतिर त्यस अल्लाहको तर्फबाट पठाइएको हुँ जसको राज्य सबै आकाशहरू तथा धर्तीमा छ, त्यसको अतिरिक्त कोही पनि पूजाको योग्य छैन, त्यसैले जीवन प्रदान गर्दछ तथा त्यसैले मृत्यु प्रदान गर्दछ । यसकारण अल्लाहप्रति तथा त्यसको अनभिज्ञ दूत प्रति

[1]यी अन्तिम शब्दहरूबाट पनि यही स्पष्ट हुन्छ कि सफल ती व्यक्तिहरू हुन्छन् जो परम आदरणीय मोहम्मदुर्रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लममा विश्वास गर्ने तथा अनुकरण गर्ने हुनेछन्। जो मोहम्मदुर्रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा विश्वास गर्ने छैनन्, उनी सफल होइनन्, हानि व्यहोर्ने तथा असफल हुनेछन् । यसका अतिरिक्त सफलताको पनि परलोकको सफलतासित तात्पर्य छ । यो सम्भव छ कि कुनै समुदाय जुन मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको रिसालत (दूतत्व) माथि निष्ठावान हुँदैनन् तथा त्यसलाई सांसारिक वैभव एवं आनन्दको बाहुल्यता प्राप्त होस् । जसरी यसबेला पाश्चात्य देश तथा यूरोपेलि एवं अन्य समुदायहरूको दशा छ कि उनी इसाई, यहूदी नास्तिक अथवा मूर्तिपूजक हुनुका उपरान्त पनि भौतिक उन्नति एवं वैभवमा श्रेष्ठ छन् । परन्तु उनको यो उन्नति अस्थाई तथा परीक्षाको लागि हो । यो उनको आख़िरतको सफलताको प्रमाण होइन । यसैप्रकार واتّبعوا النور الذي أنزل معه बाट यो कुरा स्पष्ट हुनजान्छ कि सूरः अल-मायदाको आयत संख्या-१५ मा प्रकाशको तात्पर्य कुर्आन मजीद नै हो । यसकारण यस प्रकाशबाट स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लमको तात्पर्य होइन । यसबाट नास्तिकता, कुफ्र एवं बहुदेववादका अन्धकारहरू हराए । तर उहाँको प्रकाशमयी विशेषता हुनुको कारण उहाँको (نورٌ من نور الله) हुनु सिद्ध हुनसक्दैन । जुनप्रकारले धर्ममा आधुनिकीकरण गर्नेहरू यो सिद्ध गर्दछन् ।

الَّذِىْ يُؤْمِنُ بِاللّٰهِ وَكَلِمٰتِهٖ وَاتَّبِعُوْهُ لَعَلَّكُمْ تَهْتَدُوْنَ ﴿١٥٨﴾

विश्वास गर, जो कि अल्लाहमा तथा त्यसको आदेशमा ईमान राख्दछन् तथा उनका अनुसरण गर ताकि तिमी सत्यमार्गमा आउन सक ।[1]

وَمِنْ قَوْمِ مُوْسٰٓى اُمَّةٌ يَّهْدُوْنَ بِالْحَقِّ وَبِهٖ يَعْدِلُوْنَ ﴿١٥٩﴾

(१५९) तथा मूसाको समुदायमा एउटा वर्ग यस्तो पनि छ जो सत्य अनुरूप नै निर्देश गर्दछ तथा त्यस अनुरूप न्याय गर्दछ ।[2]

وَقَطَّعْنٰهُمُ اثْنَتَىْ عَشْرَةَ اَسْبَاطًا اُمَمًا ؕ وَاَوْحَيْنَآ اِلٰى مُوْسٰٓى

(१६०) तथा हामीले उनलाई बारह परिवारहरूमा बाँडेर सबैको अलग-अलग समुदाय

[1]यो आयत पनि मोहम्मदूर्रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको दूतत्वलाई विश्वव्यापी हुने कुरोको खुला प्रमाण हो । यसमा अल्लाह तआलाले नबी करीम सल्लल्लाहु अलैहि वसल्लमलाई यो आदेश दिइएको छ कि भनिदिनुस् कि हे सम्पूर्ण जगतका मनुष्यहरू ! म सबैतिर अल्लाहको दूत भएर पठाइएको हूँ । यसप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लम समस्त मानव जातिको मोक्षदाता एवं ईशदूत हुन् । अब न मोक्ष तथा मार्गदर्शन ईसाइयतमा छ र न यहूदियतमा एवं न कुनै अन्य धर्ममा केवल इस्लाममा छ । यस आयतमा तथा यसभन्दा पूर्व आयतमा उहाँलाई अनभिज्ञ नबी भनिएको छ । यो उहाँको प्रमुख विशेषता हो । उम्मी (اُمِّی) को अर्थ हो अशिक्षित एवं अनपढ । अर्थात् उहाँले कुनै गुरूबाट अथवा शिक्षकसित कुनै प्रकारको शिक्षा प्राप्त गर्नु भएन । तर यसको उपरान्त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले जुन कुर्आन करीम प्रस्तुत गर्नुभयो त्यसको विशेषता तथा भाषाको समक्ष संसारभरिका भाषणकर्ता तथा भाषा विशेषज्ञहरूले घुँडा टेकिदिए तथा उहाँले जुन शिक्षाहरू प्रस्तुत गर्नुभयो तिनका यथार्थता तथा वास्तविकतालाई समस्त संसारले स्वीकार गर्दछ, जुन यस कुराको प्रमाण हो कि उहाँ वास्तवमा अल्लाहका सच्चा दूत हुन्, बरू एक अनपढ न यस्तो कुर्आन प्रस्तुत गर्नसक्छ तथा न यस्ता शिक्षाहरू वर्णन गर्न सक्दछ, जुन न्यायका श्रेष्ठ नमूना हुन् तथा मानवताको सफलता एवं उन्नतिका लागि अनिवार्य हुन् । तिनलाई न अपनाईकन संसार वास्तविक सुख, शान्ति एवं कुशलताको प्राप्ति गर्न सक्दैन ।

[2]यसबाट तात्पर्य तिनै केही मानिसहरू हुन् जो मुसलमान भएका थिए । अब्दुल्लाह बिन सलाम, आदि (رضی اللہ عنہم)

إِذِ اسْتَسْقَىٰهُ قَوْمُهُۥٓ أَنِ اضْرِب بِّعَصَاكَ الْحَجَرَ ۖ فَانۢبَجَسَتْ مِنْهُ اثْنَتَا عَشْرَةَ عَيْنًا ۖ قَدْ عَلِمَ كُلُّ أُنَاسٍ مَّشْرَبَهُمْ ۚ وَظَلَّلْنَا عَلَيْهِمُ الْغَمَامَ وَأَنزَلْنَا عَلَيْهِمُ الْمَنَّ وَالسَّلْوَىٰ ۖ كُلُوا مِن طَيِّبَاتِ مَا رَزَقْنَاكُمْ ۚ وَمَا ظَلَمُونَا وَلَـٰكِن كَانُوٓا أَنفُسَهُمْ يَظْلِمُونَ ﴿١٦٠﴾

निर्धारित गरिदियौं ।[1] तथा हामीले मूसालाई आदेश दियौं, जबकि उनको समुदायले उनीसित पानी माँगे, कि आफ्नो लट्ठीलाई अमुक ढुङ्गामा बजार अनि तुरून्त त्यसबाट बाह्र मूल फुटेर बग्नलागे । प्रत्येक व्यक्तिले आफ्नो पानी पिउने ठाउँ थाहा पाए । तथा हामीले उनीमाथि बादलहरूको छायाँ गऱ्यौं र उनीमाथि 'मन्न' र 'सलवा' अवतरित गऱ्यौं कि पवित्र स्वादिष्ट कुरा खाऊ जुन हामीले तिमीलाई प्रदान गरेका छौं । तथा उनीहरूले हाम्रो कुनै हानि गरेनन् परन्तु आफ्नै हानि गरिरहे ।

وَإِذْ قِيلَ لَهُمُ اسْكُنُوا هَـٰذِهِ الْقَرْيَةَ وَكُلُوا مِنْهَا حَيْثُ شِئْتُمْ وَقُولُوا حِطَّةٌ وَادْخُلُوا الْبَابَ سُجَّدًا نَّغْفِرْ لَكُمْ خَطِيٓـَٔاتِكُمْ ۚ سَنَزِيدُ الْمُحْسِنِينَ ﴿١٦١﴾

(१६१) तथा जब उनीहरूलाई आदेश दिइयो कि तिमीहरू त्यस बस्तीमा गई बस तथा यसमा जहाँबाट चाहन्छौ खाऊ तथा मुखले यो भन्दै जानु कि क्षमा माग्दछौं तथा ढोक गर्दै द्वारबाट प्रवेश गर्नु । हामीले तिम्रा त्रुटिहरूलाई क्षमा गरिदिनेछौं । जो सदाचार गर्नेछन् उनीहरूलाई यसभन्दा अधिक प्रदान गर्नेछौं ।

فَبَدَّلَ الَّذِينَ ظَلَمُوا مِنْهُمْ قَوْلًا غَيْرَ الَّذِي قِيلَ لَهُمْ فَأَرْسَلْنَا

(१६२) तब ती अत्याचारीहरूले एउटा कथनलाई परिवर्तन गरे जुन त्यस कथनको विरूद्ध थियो जसको उनीहरूलाई आदेश दिइएको थियो । यसपछि हामीले

[1](أسباط) बहुवचन हो (سِبْط) को तथा यसको अर्थ पौत्र हो । यहाँ अस्बात वंशहरूको लागि प्रयोग गरिएको छ । अर्थात् आदरणीय याकूबका बारह पुत्रहरूबाट बारह वंश धर्तीमा बने । प्रत्येक वंशमाथि अल्लाह तआलाले एउटा-एउटा निरीक्षक पनि नियुक्त गरेको थियो तथा भनेको थियो ﴿وَبَعَثْنَا مِنْهُمُ اثْنَيْ عَشَرَ نَقِيبًا﴾ (सूरःअल-मायदः-१२) यहाँ अल्लाह तआला ती बारह समुदायहरूका केही विशेषताहरूमा परस्पर विभेद हुनुको कारण उनका अलग-अलग समुदाय हुनुको चर्चा उपकार दर्शाउने उद्देश्यले गरिराखेको छ ।

عَلَيْهِمْ رِجْزًا مِّنَ السَّمَآءِ بِمَا كَانُوْا يَظْلِمُوْنَ ﴿١٦٢﴾

आकाशबाट एउटा आपदा पठाया यसकारण कि उनीहरू अत्याचार गर्ने गर्दथे ।[१]

وَسْـَٔلْهُمْ عَنِ الْقَرْيَةِ الَّتِيْ كَانَتْ حَاضِرَةَ الْبَحْرِ ۘ إِذْ يَعْدُوْنَ فِي السَّبْتِ إِذْ تَأْتِيْهِمْ حِيْتَانُهُمْ يَوْمَ سَبْتِهِمْ شُرَّعًا وَّيَوْمَ لَا يَسْبِتُوْنَ ۙ لَا تَأْتِيْهِمْ ۚ كَذٰلِكَ ۚ نَبْلُوْهُمْ بِمَا كَانُوْا يَفْسُقُوْنَ ﴿١٦٣﴾

(१६३) तथा तपाई उनीहरूसित[२] ती नागरीकहरूको[३] जो समुद्रका निकट बस्दथे त्यस समयको दशा सोध्नुस् जब उनी शनिवारका दिनको विषयमा सीमा नाघिराखेका थिए,जबकि तिनको शनिवारका दिन उनलाई माछाहरू प्रत्यक्ष भई उनका समक्ष आउँदथे । तथा जब शनिवारको दिन हुँदैनथ्यो, तब उनका समक्ष आउँदैनथे । हामीले उनीहरूको यसप्रकार परीक्षा लिराखेका थियौं, यसकारणले कि उनीहरू आदेशहरूको अवहेलना गरिराखेका थिए ।[४]

---

[१]आयत संख्या १६० देखि १६२ सम्म जुन कुराहरू वर्णित गरिएका छन् यिनी ती हुन् जुन प्रथम भागको सूरः अल-बकरःको प्रारम्भमा वर्णित गरिएको छ । त्यहाँ उनको विस्तृत व्याख्या हेर्नुहोला ।

[२](وَسْـَٔلْهم) मा (هُم) सर्वनाम हो, जसको संकेत यहूदीहरूतिर छ अर्थात् 'उनीहरूसित सोध्नुस्' यसबाट यहूदीहरूलाई यो भन्नुको पनि उद्देश्य छ कि यसको ज्ञान नबी सल्लल्लाहु अलैहि वसल्लमलाई पनि छ, जुन उहाँ सल्लल्लाहु अलैहि वसल्लमको सत्यताको प्रमाण हो किनभने अल्लाहतिरबाट प्रकाशना (वह्यी) बिना उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई यस घटनाको ज्ञान हुनु असम्भव छ ।

[३]त्यस वस्तीको निर्धारणमा मतभेद छ, कोही त्यसको नाम ईला, कोही तबरीया, कोही ईलिया तथा कोही त्यो सीरीयालाई कोही बस्ती जुन समुद्रको निकट थियो, भन्दछ । व्याख्याकारहरूको अधिकतर झुकाव ईलातिर छ जुन मदयन तथा तूर पर्वतको मध्येमा कुलजुम (भू-मध्यसागर) को किनारमा आबाद थियो ।

[४](حِيتَانٌ) शब्द (حوت) शब्दको बहुवचन हो, जसको अर्थ हो माछा (شرّعاً) शब्द (شارع) शब्दको बहुवचन हो । अर्थ हो जल सतहमा आई देखापर्ने माछाहरू । यो यहूदीहरूको त्यस घटनातिर संकेत हो, जसमा उनीहरूले शनिवारका दिन माछाको शिकारबाट रोकिएका थिए । तर परीक्षाको रूपमा शनिवारका दिन माछाहरू जल सतहमा देखा परेर उनीहरूलाई शिकार गर्नका लागि आमन्त्रित गर्दथे । तथा जब यो दिन समाप्त हुन्थ्यो, त त्यसप्रकार आउँदैनथे ।

(१६४) तथा जबकि उनीहरूमध्ये एउटा समूहले यो भने कि तिमी यस्ता व्यक्तिहरूलाई किन उपदेश दिन्छौ जसलाई अल्लाह पूर्णरूपले विनाश गर्न आँटेको छ । अथवा उनलाई कठोर दण्ड दिन चाहन्छ ।[1] उनीहरूले उत्तर दिए कि तिम्रो पालनकर्ताका समक्ष याचना गर्नको निम्ति तथा यसकारण कि सम्भवतः यिनीहरू तर्सुन् ।

وَإِذْ قَالَتْ أُمَّةٌ مِّنْهُمْ لِمَ تَعِظُونَ قَوْمًا ۙ اللَّهُ مُهْلِكُهُمْ أَوْ مُعَذِّبُهُمْ عَذَابًا شَدِيدًا ۖ قَالُوا مَعْذِرَةً إِلَىٰ رَبِّكُمْ وَلَعَلَّهُمْ يَتَّقُونَ ﴿١٦٤﴾

(१६५) त जब उनी त्यसलाई बिर्सिए जसको स्मरण उनलाई गराइन्थ्यो ।[2] तब हामीले

فَلَمَّا نَسُوا مَا ذُكِّرُوا بِهِ أَنجَيْنَا

अन्ततः यहूदीहरूले एउटा बहाना निकालेर अल्लाहका आदेशको अवहेलना गरे कि खाल्डो खने ताकि माछाहरू त्यसैमा अल्भिरहून् तथा जब शनिवारको दिन समाप्त हुन्थ्यो, त तिनलाई समात्थे ।

[1]यस गुटसित तात्पर्य सत्कर्मीहरूको त्यो समूह हो, जो यस्ता बहाना बनाउँदैनथ्यो तथा अन्य व्यक्तिहरूलाई सम्भाए र उनको सुधारबाट निराश पनि भइसकेको थियो । यसप्रकार उनीहरूमा केही व्यक्तिहरू बुझ्ने यस्ता पनि थिए जो उनीहरूलाई शिक्षा दिन्थे तथा यस कामबाट रोक्थे । सत्कर्मीहरूको यो समूहले उनीहरूलाई यो भन्थ्यो कि यस्ता व्यक्तिहरूलाई सम्भाउनु-बुझाउनुबाट के लाभ जसका भाग्यमा विनाश तथा अल्लाहको यातना छ । अथवा यस गुटबाट तात्पर्य तिनै उल्लंघनकारी तथा अवज्ञाकारी व्यक्ति हुन्, जब उनीहरूलाई बुझाउनेहरूले शिक्षा दिन्थे त भन्थे कि जब तिम्रो विचारले विनाश तथा अल्लाहको यातना हाम्रो भाग्यमा रहेछ, तब त्यसपछि हामीलाई किन शिक्षा-दीक्षा दिन्छौ ? तब उनीहरूले उत्तर दिन्थे कि एक त आफ्नो प्रभुका समक्ष क्षमा प्रस्तुत गर्नको लागि ताकि हामी त अल्लाहको पकडबाट सुरक्षित रहौं किनभने अल्लाहका आदेशहरूको अवहेलना भइराखेको हेर्नु तथा त्यसबाट मानिसहरूलाई नरोक्नु पनि अपराध हो, जसको कारण अल्लाह तआला समात्न सक्दछ । दोस्रो लाभ यो हो कि शायद यिनीहरू अल्लाह तआलाहरूको अवहेलना गर्नबाट रोकिइऊन् । पहिलो व्याख्याबाट तीन समूह भए । (१) अवज्ञाकारी तथा शिकार गर्ने गुट । (२) त्यो समूह जसले एकदमै एकान्त धारणा गरेको थियो, उनीहरू न अवज्ञाकारीहरू मध्येबाट थिए न रोक्नेहरू मध्येबाट । (३) त्यो गुट जुन अवज्ञाकारी थिएन तथा एकदमै एकान्त धारण गरेको पनि थिएन । बरू अवज्ञाकारिहरूलाई रोक्दथ्यो पनि । दोस्रो व्याख्याको आधारमा दुई समूह भए, एउटा अवज्ञाकारिहरूको समूह, दोसो रोक्नेहरूको समूह ।

[2]अर्थात् शिक्षा-दीक्षाको उनीहरूले कुनै चिन्ता गरेनन् तथा अवज्ञाकारितामा नै अट्टेरी भएर बसिरहे ।

ٱلَّذِينَ يَنْهَوْنَ عَنِ ٱلسُّوٓءِ وَأَخَذْنَا ٱلَّذِينَ ظَلَمُوا۟ بِعَذَابٍۭ بَـِٔيسٍۭ بِمَا كَانُوا۟ يَفْسُقُونَ ﴿١٦٥﴾

उनीहरूलाई त बचाइदियो, जो उनलाई नराम्रो कुराबाट रोक्दथे तथा उनीहरूलाई जो अत्याचार गर्दथे एउटा कठोर यातनामा समातिहाल्यौं । यसकारण कि उनीहरू आज्ञाको उल्लंघन गर्दथे ।[1]

فَلَمَّا عَتَوْا۟ عَن مَّا نُهُوا۟ عَنْهُ قُلْنَا لَهُمْ كُونُوا۟ قِرَدَةً خَـٰسِـِٔينَ ﴿١٦٦﴾

(१६६) अर्थात् जब उनी जुन कामबाट मनाही गरिएको थियो त्यसमा सीमालाई उल्लंघन गरिहाले, त हामीले उनलाई भन्यौं कि तिमी अपमानित बाँदर भइहाल ।[2]

وَإِذْ تَأَذَّنَ رَبُّكَ لَيَبْعَثَنَّ عَلَيْهِمْ إِلَىٰ يَوْمِ ٱلْقِيَـٰمَةِ مَن يَسُومُهُمْ سُوٓءَ ٱلْعَذَابِ ۗ إِنَّ رَبَّكَ لَسَرِيعُ ٱلْعِقَابِ ۖ وَإِنَّهُۥ

(१६७) तथा त्यो समय याद राख्नुपर्छ जबकि तपाईंको पालकले भन्यो कि त्यसले यी (यहूदीहरू) माथि प्रलयसम्म यस्तो व्यक्तिलाई अधिकृत राख्नेछ, जसले यिनीहरूलाई कठोर दण्डद्वारा दु:ख पुर्‍याइराख्ने छ ।[3] नि:सन्देह तपाईंको

---

[1]अर्थात् उनीहरू अत्याचारी पनि थिए, अल्लाह तआलाका आदेशहरूको अवहेलना गरेर उनीहरूले आफ्ना प्राणहरूमाथि अत्याचार गरे तथा उनीहरूलाई नरकको ईंधन बनाइयो तथा उपद्रवी पनि किनकि अल्लाहका आदेशहरूको अवहेलनालाई आफ्नो आचरण तथा कर्म बनाए ।

[2](عَتَوا) को अर्थ हो जो ईश्वरीय आदेशहरूको उल्लंघनमा सीमा अतिक्रमण गरे । व्याख्याकारहरूमा यस कुरोमा मतभेद छ कि मोक्ष प्राप्त गर्नेवाला मात्र तिनै व्यक्ति थिए, जो रोक्दथे तथा शेष दुबै अल्लाहको यातनाका भोगी भए ? अथवा पकडमा आउनेवाला मात्र अवहेलना गर्नेवाला थिए ? तथा शेष दुई गुट मोक्ष प्राप्त गर्नेवाला थिए । इमाम इब्ने कसीरले दोस्रो मतलाई प्रमुखता दिनु भएको छ ।

[3](تأذن-إيذان) शब्दको अर्थ (إعلام) शब्दको समतुल्य हो, जसको अर्थ घोषणा हो (सूचित गरिदिनु, स्मरण गराईदिनु) अर्थात त्यो समय पनि स्मरण गर, जब्र तपाईंको पोषकले यी यहूदीहरूलाई राम्ररी सूचित गरिदिएको थियो । (لَيَبْعَثَنَّ) (शब्दमा अरबीको अक्षर 'लाम' बल दिनुको निम्ति हो जुन सौगन्धको अर्थको लाभ दिन्छ । अर्थात् कसम खाएर अत्याधिक प्रभावित ढङ्गले अल्लाह तआला भनिरहेको छ कि त्यसले यिनीहरूमाथि प्रलयसम्म यस्ता व्यक्तिहरूलाई प्रभावित राख्नेछ, जो यिनलाई कठोर यातनाहरूमा ग्रसित राख्नेछन् । अत: यहूदीहरूको इतिहास यसै अपमान निन्दा तथा दासता एवं अधीनताको इतिहास हो जसको सूचना अल्लाह तआलाले यस आयतमा दिएको छ । इस्राईलको वर्तमान सरकार कुरआनद्वारा

لَغَفُورٌ رَّحِيمٌ ﴿١٦٧﴾

पोषक अति शीघ्र दण्ड दिन्छ तथा निःसन्देह त्यो वास्तवमा अत्याधिक क्षमाशील तथा कृपालु छ ।[1]

وَقَطَّعْنَاهُمْ فِي الْأَرْضِ أُمَمًا مِّنْهُمُ الصَّالِحُونَ وَمِنْهُمْ دُونَ ذَٰلِكَ وَبَلَوْنَاهُم بِالْحَسَنَاتِ وَالسَّيِّئَاتِ لَعَلَّهُمْ يَرْجِعُونَ ﴿١٦٨﴾

(१६८) तथा हामीले संसारमा तिनका (विभिन्न) गुट बनाइदियौं। उनीहरूमध्ये केही पुनीत थिए तथा केही अन्य आचरणका थिए एवं हामीले उनलाई सम्पन्नता तथा दरिद्रताद्वारा उनको परीक्षा लिंदैरहयौं ताकि सम्भवत: उनीहरू फर्कुन्।[2]

فَخَلَفَ مِن بَعْدِهِمْ خَلْفٌ وَرِثُوا الْكِتَابَ يَأْخُذُونَ عَرَضَ هَٰذَا الْأَدْنَىٰ وَيَقُولُونَ سَيُغْفَرُ لَنَا وَإِن يَأْتِهِمْ عَرَضٌ

(१६९) अनि उनका पश्चात यस्ता व्यक्तिहरू कुपुत्र भए[3] कि धर्मशास्त्रलाई उनीबाट प्राप्त गरे । उनी यसै तुच्छ संसारको अलिकति सामग्री बटुल्छन् ।[4] तथा भन्दछन् कि हामीलाई अवश्य मोक्ष प्राप्त हुनेछ ।[5] तथा उनको

वर्णित यथार्थताको विपरीत छैन यसकारण कि कुरआनमा वर्णित अनिवंधन (وَحَبْلٍ مِّنَ النَّاسِ) को द्योतक छ जुन कुरआनी यथार्थताको विपरीत छैन बरू त्यसको समर्थक हो। (विस्तारको लागि हेर्नुस् सूरः आले इमरान-११२ को व्याख्या)

[1]अर्थात् यदि उनीहरू मध्येबाट क्षमा माँगेर मुसलमान हुनेछ भने त्यो यस अपमान तथा घोर यातनाबाट मुक्त हुनेछ ।

[2]यसमा यहूदीहरूको विभिन्न गुटहरूमा विभाजित हुने र उनीहरूमध्ये केहीको पुनित हुने कुराको चर्चा छ। तथा उनको दुबै प्रकारले परीक्षा लिनुको वर्णन छ ताकि संभवत: उनी आफ्ना कर्तूतहरूबाट रोकिऊन् तथा अल्लाहतिर फर्कुन् ।

[3](خَلَفَ) (लाममाथि ज़बर भएको) सपूतको (خَلْف) (लाम लिप्त भएमा) कुपुत्रहरूको अर्थहरूमा प्रयोग हुन्छ ।

[4](دُنُوٌّ أَدْنَىٰ) (निकट) सित लिइएको छ अर्थात् निकटको धन उपार्जन गर्छन्, जसको तात्पर्य संसार हो अथवा यो (دَنَاءَةٌ) सित लिइएको छ, जसबाट अभिप्राय तुच्छ, हीन तथा गिरेको धन हो । दुबैको उद्देश्य उनको मोह मायालाई दर्शाउँछ ।

[5]अर्थात् माया मोहका उपरान्त पनि मोक्षका कामना गर्दछन् । जस्तो आजकलका मुसलमानहरुको दशा छ ।

مِّثْلُهٗ يَاْخُذُوْهُ ۭ اَلَمْ يُؤْخَذْ عَلَيْهِمْ مِّيْثَاقُ الْكِتٰبِ اَنْ لَّا يَقُوْلُوْا عَلَى اللّٰهِ اِلَّا الْحَقَّ وَدَرَسُوْا مَا فِيْهِ ۭ وَالدَّارُ الْاٰخِرَةُ خَيْرٌ لِّلَّذِيْنَ يَتَّقُوْنَ ۭ اَفَلَا تَعْقِلُوْنَ ﴿١٦٩﴾

पासमा त्यस्तै अरु धन आयो भने त्यसलाई पनि लिनेछन् । के उनीसित यस शास्त्रको यस विषयको वचन लिइएन ? कि अल्लाहतिर सत्य कथनको अतिरिक्त अन्य कथनलाई सम्बन्धित नगरून ?[1] तथा उनीहरूले यस शास्त्रमा जे-जति थियो त्यसलाई पढे ।[2] तथा परलोक गृह तिनीहरूका लागि उत्तम छ जो अल्लाहसित तर्सन्छन्, अनि के तिमी बुझ्दैनौ ?

وَالَّذِيْنَ يُمَسِّكُوْنَ بِالْكِتٰبِ وَاَقَامُوا الصَّلٰوةَ ۭ اِنَّا لَا نُضِيْعُ اَجْرَ الْمُصْلِحِيْنَ ﴿١٧٠﴾

(१७०) तथा जो धर्मशास्त्रमा अडिग छन् तथा नमाज़को स्थापना गर्दछन्, हामीले यस्ता मानिसहरूका जो स्वयंको सुधार गर्दछन्, प्रत्युपकार व्यर्थ गर्नेछैनौ ।[3]

---

[1]यस उपरान्त पनि यिनी झूठा कुरा अथवा असत्य कुरा अल्लाह तआ़लासित सम्बन्धित गर्नबाट चुक्दैनन् । उदाहरणार्थ उपरोक्त मोक्षको कुरा ।

[2]यसको एउटा अर्को भावार्थ "मेटाउनु" पनि हुनसक्दछ जस्तै (دَرَست الرِّيح الآثار) (वायुले चिन्ह मेटाइदियो) अर्थात् धर्मशास्त्रको कुराहरूलाई मेटाइहाले अर्थात् तद्अनुसार कर्म गरेनन् ।

[3]यी व्यक्तिहरूमध्ये जो अल्लाहको मार्गलाई अपनाउँछन्, शास्त्रलाई सुदृढताले समात्छन्, जसबाट तात्पर्य मूल तौरात हो तथा जसअनुसार कर्म गर्दै मोहम्मदुर्रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको दूतत्वमा विश्वास गर्दछन्, नमाज़ आदिलाई दृढताले पढ्दै रहन्छन्, त अल्लाह तआ़लाले यस्ता सुधार गर्नेहरूको पुण्यलाई व्यर्थ पार्ने छैन । यसमा ती शास्त्रधारीहरू (सम्बोधित विषयको सम्बन्ध विशेषरूपले यहूदीहरूसित छ) को वर्णन छ, जो अल्लाहसित तर्सन्छन्, किताबका कुरालाई दृढताले पालन गर्दछन् तथा नमाज़लाई निश्चित समयमा निरन्तर पढ्दछन् । अतः यिनीहरूका लागि प्रलोकको शुभ-सूचना छ । यसको अर्थ यो हो कि उनी मुसलमान बनुन् तथा मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा ईमान ल्याऊन् । किनभने सम्पूर्ण जगतका लागि अब अन्तिम ईशदूत परम आदरणीय मुहम्मद मुस्तफ़ामा ईमान नभईकन मोक्ष सम्भव छैन ।

وَإِذْ نَتَقْنَا الْجَبَلَ فَوْقَهُمْ كَأَنَّهُ ظُلَّةٌ وَظَنُّوا أَنَّهُ وَاقِعٌ بِهِمْ خُذُوا مَا آتَيْنَاكُم بِقُوَّةٍ وَاذْكُرُوا مَا فِيهِ لَعَلَّكُمْ تَتَّقُونَ ﴿١٧١﴾

(१७१) तथा त्यो समय पनि स्मरणीय छ, जब हामीले पर्वतलाई छाता जस्तै उनीमाथि झुण्ड्याइदियौं र उनीहरूलाई विश्वास भयो कि अब उनीमाथि खस्न आटेको छ तथा भन्यौं कि हामीले जुन शास्त्र तिमीलाई दिएका हौं, त्यसलाई बलियो रुपमा स्वीकार गर तथा याद राख जुन आदेश यसमा छ, त्यसबाट सम्भावना छ कि तिमी अल्लाहसित तर्सन थाल ।[1]

وَإِذْ أَخَذَ رَبُّكَ مِن بَنِي آدَمَ مِن ظُهُورِهِمْ ذُرِّيَّتَهُمْ وَأَشْهَدَهُمْ عَلَىٰ أَنفُسِهِمْ أَلَسْتُ بِرَبِّكُمْ قَالُوا بَلَىٰ شَهِدْنَا أَن تَقُولُوا

(१७२) तथा जब तपाईंको पालनकर्ताले आदमका सन्तानका पिठ्यूँबाट तिनको सन्तति निकाल्यो तथा उनीसित उनैको सम्बन्धमा वचन लियो कि के म तिम्रो पालनकर्ता होइन ? सबैले उत्तर दिए, किन होइन, हामी सबै साक्षी हौं ।[2]

[1]यो त्यस समयको घटना हो जब आदरणीय मूसाले उनको पासमा तौरात लिएर आए तथा त्यसका आदेश उनीहरूलाई सुनाए । तब उनीहरूले आफ्नो व्यवहार अनुसार त्यसको अनुरूप काम गर्न अस्वीकार तथा अवहेलना गरे, जसकारण अल्लाह तआलाले तिनको टाउकोमाथि पर्वत ल्याइ उभ्याइदियो कि तिमीमाथि खसालेर किचिदिइनेछ, जसबाट तर्सेर उनीहरूले वचन दिए कि तौरात बमोजिम काम गर्नेछौं केहि ज्ञाताहरू भन्दछन् । कि यो घटना रफ़आ पर्वतको हो जुन उनको माँगको कारण घटित भयो । जब उनीहरूले भने कि हामी तौरातका नियम अनुसार काम त्यतिखेर गर्नेछौं जब हाम्रा टाउका माथि पर्वत उठाएर देखाइन्छ परन्तु पहिलेका कुरा अधिक उचित लाग्छ । (و الله أعلم) यहाँ मात्र पर्वतको वर्णन छ । तर यसभन्दा पूर्व सूरः अल-बक़रः आयत संख्या ६३ तथा आयत संख्या-९३ मा, दुई स्थानहरूमा यस घटनाको वर्णन आएको छ । त्यहाँ यसको नाम स्पष्टरूपले तूर पर्वत भनिएको छ ।

[2]यो (عَهْدِ الست) वचन भनिन्छ जुन (الست بربكم) बाट बनाइएको योग हो । यो वचन आदरणीय आदमको सृष्टिका पशचात उनका पछाडि हुने सन्तानबाट लिइएको थियो । यसको विस्तृत विवरण एक सहीह हदीसमा यसप्रकार आउँछ कि "अरफ़ाका दिन" "नोमान" नामी स्थानमा अल्लाह तआलाले आदमका सन्तानबाट वचन लियो । यसप्रकार कि आदमको पिठ्यूँबाट उनका पैदा हुने सन्तानहरूलाई निकालिएको थियो तथा उनलाई आफ्नो समक्ष फैलाइदियो तथा उनीसित सोध्यो कि के म तिम्रो प्रभु होइन ?

يَوْمَ الْقِيٰمَةِ اِنَّا كُنَّا عَنْ هٰذَا غٰفِلِيْنَ ۙ﴿١٧٢﴾

ताकि तिमीहरू प्रलयका दिन यो नभन कि हामी त यसबाट मात्र अनभिज्ञ थियौं ।

اَوْ تَقُوْلُوْٓا اِنَّمَآ اَشْرَكَ اٰبَاۗؤُنَا مِنْ قَبْلُ وَكُنَّا ذُرِّيَّةً مِّنْۢ بَعْدِهِمْ ۚ اَفَتُهْلِكُنَا بِمَا فَعَلَ الْمُبْطِلُوْنَ ﴿١٧٣﴾

(१७३) अथवा यो भन कि सर्वप्रथम मिश्रण (शिर्क) त हाम्रा पूर्वजहरूले गरे तथा हामी उनी पश्चात उनका वंशमा भयौं, त के ती कुकर्मिहरूको कुकर्ममा तिमीले हामीलाई विनाशमा पारिदिन्छौ ।[1]

---

सबैले उत्तर दिए (بلى، شهدنا) (किन होइन, हामी सबै साक्षी छौं) । (मुसनद अहमद भाग १, पृष्ठ २७२ तथा अल-हाकिम भाग-२, पृष्ठ संख्या-५४४ एवं यसलाई सहीह भनेका छन् र इमाम ज़हबी उनीसित सहमत छन्) इमाम शौक़ानी यस हदीसको विषयमा लेख्दछन्, "यसको प्रमाणमा कुनै कमी छैन" (फ़तहुल क़दीर) यसका अतिरिक्त इमाम शौक़ानी भन्नुहुन्छ कि "यो सृष्टिलोक" भनिन्छ, यसको यही व्याख्या ठीक तथा उचित एवं सत्य छ, जसबाट हटेर कुनै अन्य भावतिर जानु उचित छैन किनभने यो प्रमाणित हदीस हो तथा यसको सम्बन्ध सहाबाबाट सिद्ध छन् तथा यसलाई कुनै अन्य भावार्थमा लिनु उचित छैन ।" अतः अल्लाहको रब (पालनकर्ता) हुनुको साक्ष्य प्रत्येक मनुष्यको प्रकृतिमा समावेशित छ । यस विषयलाई रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले यसप्रकार वर्णन गर्नुभएको छ कि "प्रत्येक शिशु प्रकृतिमा जन्म लिन्छ, परन्तु त्यसका माता-पिता उसलाई यहूदी, इसाई अथवा अग्निपूजक बनाइदिन्छन् । जुनप्रकार जनावरको बच्चा पूर्णरूपले जन्मन्छ, उसको नाक, कान काटेको हुँदैन ।" (सहीह बुख़ारी किताबुल ज़नायेज़ तथा सहीह मुस्लिम किताबुल क़द्र) तथा सहीह मुस्लिमको शब्द हो । अल्लाह तआ़ला भन्नुहुन्छ, "मैले आफ्ना भक्तहरूलाई हनीफ़ (अल्लाहतिर एकाग्रताले लीन हुने) सृष्टि गरेको छु तर शैतानले उनलाई उनको प्राकृतिक धर्मबाट विचलित गरिदिन्छ ।"अल-हदीस (सहीह मुस्लिम किताबुल जन्नः) यो प्रकृति अथवा प्राकृतिक धर्म नै एकेश्वरवाद (तौहीद) हो तथा त्यसद्वारा उतारिएको धर्म विधान हो जुन अब इस्लामको रूपमा सुरक्षित तथा विद्यमान छ ।

[1]अर्थात् हामीले तिमीसित यो वचन तथा आफ्नो स्वामित्वको साक्ष्य यसकारण लिएका थियौं ताकि तिमी यो तर्क प्रस्तुत नगर्न सक कि हामी त अन्जान थियौं अथवा हाम्रा पूर्वज बहुदेव उपासना (शिर्क) गर्दै आएका थिए । यो त प्रलयका दिन अल्लाहको न्यायलयमा मान्य हुनेछैन ।

وَكَذٰلِكَ نُفَصِّلُ الْاٰيٰتِ وَلَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿١٧٤﴾

(१७४) तथा हामी यसैप्रकार आयतहरूलाई स्वच्छतापूर्वक वर्णन गर्दछौं ताकि उनी वापस फर्केर आऊन् ।

وَاتْلُ عَلَيْهِمْ نَبَاَ الَّذِيْٓ اٰتَيْنٰهُ اٰيٰتِنَا فَانْسَلَخَ مِنْهَا فَاَتْبَعَهُ الشَّيْطٰنُ فَكَانَ مِنَ الْغٰوِيْنَ ﴿١٧٥﴾

(१७५) तथा उनीहरूलाई त्यस व्यक्तिको दशा पढेर सुनाउनुस् कि जसलाई हामीले आफ्ना निशानीहरू प्रदान गऱ्यौं, अनि त्यो तिनलाई वेवास्ता गरी भाग्यो, अनि शैतान त्यसको पछि लाग्यो, यसप्रकार त्यो मार्ग-विचलित हुनेहरूमा सम्मिलित भयो ।[१]

وَلَوْ شِئْنَا لَرَفَعْنٰهُ بِهَا وَلٰكِنَّهٗٓ اَخْلَدَ اِلَى الْاَرْضِ وَاتَّبَعَ هَوٰىهُ ۚ فَمَثَلُهٗ كَمَثَلِ الْكَلْبِ ۚ اِنْ تَحْمِلْ عَلَيْهِ يَلْهَثْ اَوْ تَتْرُكْهُ يَلْهَثْ ۗ ذٰلِكَ مَثَلُ الْقَوْمِ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا ۚ

(१७६) तथा यदि हामीले चाहेको भए उसलाई यी निशानीहरूका कारण उच्च पदमा आसीन गरिदिन्थ्यौं, तर त्यो त संसारको माया-मोहमा पऱ्यो एवं आफ्ना इच्छाहरूको अनुसरण गर्न थाल्यो त उसको दशा कुकुरको समान भयो कि यदि तिमी उसमाथि आक्रमण गर्दछौ तैपनि जिभ्रो निकाली फ्याँ-फ्याँ गर्छ अथवा त्यसलाई छाडिदिन्छौ तैपनि फ्याँ-फ्याँ गर्छ ।[२] यही दशा उनीहरूको छ जसले

---

[१]व्याख्याकारहरूले यसलाई एउटा निश्चित व्यक्तिसित सम्बन्धित मानेका छन् जसलाई ईश्वरीय ग्रन्थको ज्ञान प्राप्त थियो तर त्यो संसार एवं शैतानको अनुयायी बनेर पथभ्रष्ट भयो । तर त्यसको निर्धारणको सन्दर्भमा कुनै प्रमाण छैन । अतः त्यसको निर्धारणको कुनै आवश्यकता पनि छैन ।

[२](لهث) थकाई अथवा तिर्खाको कारण जिभ्रो निकाल्नुलाई भन्दछन् । कुकुरको यही स्वभाव हुन्छ कि त्यसलाई झपार्नुस् अथवा उसको दशामा छोड्दिनुस् दुबै परिस्थितिमा त्यो भुक्नबाट रोकिदैन, यसैप्रकार त्यसको यो पनि स्वभाव छ कि त्यसले पेटभरि खाएको होस् अथवा भोको अथवा स्वस्थ होस् अथवा रोगी भएको होस् अथवा स्फूर्त, प्रत्येक अवस्थामा जिभ्रो निकालेर फ्याँ-फ्याँ गरिरहन्छ । यही दशा एक यस्तो व्यक्तिको छ, उसलाई शिक्षा-दीक्षा देउ अथवा नदेउ, उसको दशा एकनाश रहनेछ तथा सांसारिक धन-दौलतको लागि ऱ्याल चुहिरहने छ ।

فَاقْصُصِ الْقَصَصَ لَعَلَّهُمْ يَتَفَكَّرُوْنَ ﴿١٧٦﴾

हाम्रा निशानीहरूलाई झुठ्लाए । अतः तपाईं यस दशाको वर्णन गरिदिनुस्, सम्भवतः उनीहरू सोच-विचार गरून् ।[1]

سَآءَ مَثَلًا الْقَوْمُ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا وَاَنْفُسَهُمْ كَانُوْا يَظْلِمُوْنَ ﴿١٧٧﴾

(१७७) ती व्यक्तिहरूको दशा पनि नराम्रो दशा छ,[2] जो हाम्रा आयतहरूलाई मिथ्या मान्दछन् तथा आफ्नो हानि गर्दछन् ।

مَنْ يَّهْدِ اللّٰهُ فَهُوَ الْمُهْتَدِيْ ۚ وَمَنْ يُّضْلِلْ فَاُولٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ﴿١٧٨﴾

(१७८) जसलाई अल्लाह तआला स्वयं मार्गदर्शन दिन्छ ती नै सोझो मार्गमा हुन्छन् । तथा जसलाई मार्गबाट बञ्चित राख्दछ, ती नै क्षतिग्रस्त (घाटामा पर्नेहरू) हुन् ।[3]

وَلَقَدْ ذَرَاْنَا لِجَهَنَّمَ كَثِيْرًا مِّنَ الْجِنِّ وَالْاِنْسِ ۖ لَهُمْ قُلُوْبٌ لَّا يَفْقَهُوْنَ بِهَا ۫ وَلَهُمْ اَعْيُنٌ لَّا يُبْصِرُوْنَ بِهَا ۫ وَلَهُمْ اٰذَانٌ لَّا يَسْمَعُوْنَ بِهَا ؕ اُولٰٓئِكَ كَالْاَنْعَامِ بَلْ هُمْ اَضَلُّ ؕ اُولٰٓئِكَ هُمُ الْغٰفِلُوْنَ ﴿١٧٩﴾

(१७९) तथा हामीले यस्ता धेरैजसो जिन्न तथा मनुष्यहरू नरकको लागि पैदा गरेका छौं ।[4] उनीहरूसित हृदय छन् जसबाट बुझ्दैनन् तथा आँखा छन्, जसबाट देख्दैनन्, एवं कान छन् जसबाट सुन्दैनन् । यिनीहरू पशु सरह छन्, बरू उनीभन्दा पनि बढी पथभ्रष्ट छन् ।[5] यी व्यक्तिहरू यस्ता हुन् जो विमुख छन् ।

[1]तथा यसप्रकारका व्यक्तिबाट शिक्षा लिएर मार्ग विचलनबाट बचून् तथा सत्यमार्गलाई अपनाऊन् ।

[2](مثلاً) शब्द विशेषक हो । मुल वाक्य यसप्रकार हुनेछ । ﴿ساء مَثَلَ الْقَوْمِ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا﴾

[3]यो अल्लाह तआलाको त्यस विधानको वर्णन हो जसको चर्चा एवं व्याख्या २, ३ पटक गरिसकिएको छ ।

[4]यसको सम्बन्ध भाग्यसित छ । अर्थात प्रत्येक मानव एवं दानव भूलोकमा गएर के गर्नेछ ? यसको ज्ञान अल्लाह तआलालाई थियो, त्यस अनुसार उसले लेखिछाडेको छ । यहाँ उनै नरकीयहरूको चर्चा छ जसलाई अल्लाहको ज्ञानले नरकीयहरू काम गर्नु थियो । अगाडि त्यसलाई अरू केही स्पष्ट गरिएको छ कि जुन व्यक्तिहरूभित्र यी दोष त्यसै रूपमा छन्, जसको वर्णन यहाँ गरिएको छ, त सम्झनुस् कि उनको परिणाम नराम्रो छ ।

[5]अर्थात् हृदय, आँखा तथा कान अल्लाह तआलाले यसकारण प्रदान गरेको छ कि मनुष्य यिनीबाट लाभ लिएर आफ्ना प्रभुलाई स्मरण गरून्, उसका निशानीहरूलाई देखुन तथा सत्य कुरोलाई ध्यानपूर्वक सुनन् ।

(१८०) तथा शुभ नामहरू अल्लाहकै लागि हुन्, यसकारण यी नामहरूबाट अल्लाहलाई नै पुकारने गर।[1] तथा यस्ता व्यक्तिहरूसित सम्बन्ध पनि नराख जो उसका नामहरूमा कुटिलता गर्छन्।[2]

وَلِلّٰهِ الْاَسْمَآءُ الْحُسْنٰى فَادْعُوْهُ بِهَا ۪ وَذَرُوا الَّذِيْنَ يُلْحِدُوْنَ فِيْٓ اَسْمَآىِٕهٖ ؕ سَيُجْزَوْنَ

ध्यानपूर्वक सुन। तर जो व्यक्ति यसबाट यो कार्य लिंदैनन्, त्यो उनीसित लाभान्वित नहुनुको कारण पशुहरुका समान छन्, तथा उनीभन्दा पनि अधिक पथभ्रष्ट भएको छ। यसकारण कि पशुहरु तैपनि केही लाभ-हानि को ख्याल राख्दछन्। किनभने ती लाभदायक वस्तुहरुबाट लाभ उठाउँछन् तथा हानिकारक पदार्थबाट टाढा रहन्छन्। तर अल्लाह तआ़लाको मार्गदर्शनबाट विमुख व्यक्तिको भित्र त यो ज्ञान पनि हुँदैन कि त्यसको लागि उपयोगी वस्तुहरु कुन चाहिं हुन् तथा हानिकारक कुन चाहिं। यसकारण अर्को वाक्यमा उनीहरुलाई असावधान भनिएको छ।

[1](حُسنىٰ) अरबी भाषामा (أحسن) को स्त्रीलिङ्ग हो। अल्लाहका यी राम्रा नामहरूसित तात्पर्य अल्लाहका ती नाम हुन् जसबाट उसका विभिन्न विशेषता, उसको श्रेष्ठता तथा प्रभुत्व एवं उसको सामर्थ्य एवं शक्तिको प्रकाशन हुन्छ। सहीह हैनको हदीसमा यिनका संख्या-९९ भनिएका छन्। तथा आदेश छ, "जो यिनको गणना गर्नेछ, स्वर्गमा जानेछ, अल्लाह तआ़ला विषम छ, विषमता प्रेमी छ।" (बुखारी किताबुद दावात बाब लिल्लाहे मेअत ईस्म र मुस्लिम किताबुल ज़िक्र बाब अस्माये अल्लाह तआ़ला व फज़लेमन अहसाहा) गणना गर्नुको अर्थ यही प्रतीत हुन्छ कि उनीबाट प्रार्थना गरियोस्। केही कथनहरूमा यी ९९ नामहरूको वर्णन गरिएको छ, तर यी कथन अस्पष्ट छन् तथा विद्वानहरूले यसलाई प्रवेशित मानेका छन् अर्थात कथाकारहरूले बृद्धि गरेका छन्। त्यो नबी सल्लल्लाहु अलैहि वसल्लमको हदीसको भाग होइन। यसको अतिरिक्त आलिमहरूले यो पनि स्पष्ट गरेका छन् कि अल्लाह तआ़लाका नामहरूको संख्या मात्र ९९ होइन, बरू यसभन्दा पनि अधिक छ। (इब्ने कसीर तथा फ़तहुल क़दीर) एउटा अरू कुरा स्पष्ट गरिहालौं कि अल्लाह तआ़लाको आफ्नो नाम जसलाई नेपाली व्याकरणमा जाति वाचक संज्ञा भन्दछन् मात्र "अल्लाह" हो यसका अतिरिक्त उपरोक्त सबै गौणीक हुन्।

[2](الحاد) (इल्हाद) को अर्थ हो कुनै एकातिर बक्र हुनु। यसै शब्दबाट (لَحد) (लहद) शब्द बनेको छ, जुन त्यस चिहानलाई भन्दछन्, जो एकातिर बनाईन्छ। धर्ममा इल्हादको मार्ग अपनाउनुको अर्थ हो कुटिलता तथा कुमार्ग अपनाउनु। अल्लाह तआ़लाका नामहरूमा इल्हाद तीन प्रकारले हुनसक्छ। (१) अल्लाह तआ़लाका नामहरूमा परिवर्तन गर्नु जस्तो मूर्तिपूजकहरूले गरे। जस्तै अल्लाहका नामहरू मध्ये "अज़ीज़" बाट "उज़्ज़ा" तथा "मन्नान" बाट "मनात" मूर्तिहरूका नाम बनाइहाले, (२) अथवा अल्लाहका नामहरूमा आफ्नो तर्फबाट बृद्धि गर्नु जसको आदेश अल्लाहले दिएन, (३) अथवा यसका नामहरूमा कमी गर्नु। जस्तो उसलाई कुनै एउटै नामले पुकार्नु, अर्को विशेषता भएका नामहरूबाट पुकार्नु नराम्रो ठानिनु। (फ़तहुल क़दीर)

مَا كَانُوْا يَعْمَلُوْنَ ﴿١٨٠﴾

उनीहरूका लागि उनीहरूले गरिएका कुराको दण्ड अवश्य हुनेछ ।

وَمِمَّنْ خَلَقْنَآ اُمَّةٌ يَّهْدُوْنَ بِالْحَقِّ وَبِهٖ يَعْدِلُوْنَ ﴿١٨١﴾

(१८१) तथा हाम्रा प्राणी वर्गमा एउटा समुदाय यस्ता पनि छन्, जो सत्य अनुसार निर्देश गर्दछन् एवं सोही अनुसार न्याय गर्दछन् ।

وَالَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا سَنَسْتَدْرِجُهُمْ مِّنْ حَيْثُ لَا يَعْلَمُوْنَ ﴿١٨٢﴾

(१८२) तथा जुन मानिसहरू हाम्रा आयतहरू (चिन्हहरू) लाई झुठ्लाउँदछन्, हामीले उनलाई विस्तारै (पकड्मा) यस्तो लिंदै गइराखेका छौं कि उनलाई थाहा पनि छैन ।

وَاُمْلِيْ لَهُمْ ۚ اِنَّ كَيْدِيْ مَتِيْنٌ ﴿١٨٣﴾

(१८३) तथा उनीहरूलाई अवसर दिन्छु । निःसन्देह मेरो उपाय बडो सुनियोजित छ ।[1]

اَوَلَمْ يَتَفَكَّرُوْا ۗ مَا بِصَاحِبِهِمْ مِّنْ جِنَّةٍ ۗ اِنْ هُوَ اِلَّا نَذِيْرٌ مُّبِيْنٌ ﴿١٨٤﴾

(१८४) के उनीहरूले यस कुरामा विचार गरेनन् कि उनका साथीलाई अलिकति पनि उन्माद छैन ? त्यो त केवल स्पष्ट सचेतक हो ।[2]

---

अल्लाहको नाममा इल्हादको एउटा रूप यो पनि हो कि तिनमा कष्ट, कल्पना, समानता एवं बेकारीको भाव लिइयोस् (ऐसरूत्तफ़ासीर) जस्तो कि कुमार्ग समुदायहरूको चलन रहिआएको छ । अल्लाह तआ़लाले आदेश दियो कि यिनीहरूबाट सतर्क रह ।

[1]यो त्यही अवसर हो जुन अल्लाह तआ़ला परीक्षाको लागि व्यक्ति तथा वर्गहरूलाई दिन्छ अनि जब त्यसलाई समाप्त चाहन्छ त कोही बचाउनमा समर्थ हुनसक्दैन किनभने उसका उपायहरू गम्भीर छन् ।

[2](صاحبٌ) (साहिब) सित तात्पर्य अन्तिम ईशदूत मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम हुन् जसलाई मिश्रणवादी कहिले जादूगर कहिले पागल (نعوذ بالله) भन्दथे । अल्लाह तआ़ला आदेश गर्दछ कि यो तिमीबाट विचार नगुर्नको परिणाम हो । त्यो त हाम्रो पैग़म्बर हो, जो हाम्रा आदेश पुर्‍याउने तथा तिनीसित असावधान रहने तथा अवहेलना गर्नेहरूका लागि सचेतक हो ।

(१८५) तथा के उनीहरूले आकाशहरू तथा धर्ती लोकमा एवं अन्य वस्तुहरूमा, जुन अल्लाहले पैदा गरेका छन् त्यसमाथि दृष्टि गरेनन् तथा यस कुरामा कि सम्भव छ उनको मृत्यु निकट नै आइपुगेको होस् ।[1] अनि अब (कुर्आन) पश्चात कुनचाहिं कुरामा यिनीहरूले विश्वास गर्नेछन् ?[2]

أَوَلَمْ يَنظُرُوا فِي مَلَكُوتِ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا خَلَقَ اللَّهُ مِن شَيْءٍ وَأَنْ عَسَىٰ أَن يَكُونَ قَدِ اقْتَرَبَ أَجَلُهُمْ ۖ فَبِأَيِّ حَدِيثٍ بَعْدَهُ يُؤْمِنُونَ ﴿١٨٥﴾

(१८६) जसलाई अल्लाह (तआ़ला) विचलित गर्छ त्यसलाई कोही मार्गमा ल्याउन सक्तैनन् तथा अल्लाह तिनलाई कुमार्गमा भ्रमित छाडि दिन्छ ।

مَن يُضْلِلِ اللَّهُ فَلَا هَادِيَ لَهُ ۚ وَيَذَرُهُمْ فِي طُغْيَانِهِمْ يَعْمَهُونَ ﴿١٨٦﴾

(१८७) यिनीहरू तपाईंसित केयामतका[3] सम्बन्धमा प्रश्न गर्दछन् कि त्यो कहिले घटित हुनेछ ।[4] (तपाईं) भनिदिनुस् कि यसको ज्ञान मात्र मेरो

يَسْأَلُونَكَ عَنِ السَّاعَةِ أَيَّانَ مُرْسَاهَا ۖ قُلْ إِنَّمَا عِلْمُهَا عِندَ رَبِّي ۖ لَا يُجَلِّيهَا لِوَقْتِهَا إِلَّا هُوَ ۚ

[1]अर्थ यो हो कि ती वस्तुहरूमा पनि यदि यिनी विचार गर्दछन् भने निश्चित नै यिनी अल्लाहमा ईमान स्थापित गर्नेछन्, त्यसको रसूलको पुष्टि तथा त्यसलाई अनुकरणको मार्गको रूपमा अपनाउँछन् तथा उनीहरूले अहिले अल्लाहका अंशियार बनाइराखेका छन्, तिनलाई छाडिदेऊन् तथा यस कुराबाट तर्सुन् कि उनीहरूलाई यस अवस्थामा मृत्यु आउन सक्छ जबकि उनी कुफ्रमा हुन्छन् ।

[2]हदीसबाट यहाँ तात्पर्य कुर्आन मजीद हो अर्थात नबी सल्लल्लाहु अलैहि वसल्लमबाट सचेत गर्नु तथा शुभ-सूचना दिनु एवं कुर्आन करीम पश्चात पनि यदि यिनीहरू विश्वास गर्दैनन् भने उनलाई यसभन्दा ठूलो सचेत गराउने कुरो अन्य के हुन सक्ला जुन अल्लाहको तर्फबाट अवतरित भयो तथा त्यस पश्चात यिनीहरू त्यसमा विश्वास नगरून् ?

[3](ساعة) (साअ:) को अर्थ हो (क्षण अथवा पल) प्रलयको साअ: यसकारण भनिएको छ कि यो सहसा यसप्रकार आउनेछ कि यो सम्पूर्ण सृष्टि एकपलमा नष्ट भ्रष्ट हुनेछ अथवा हिसाबको शीघ्रताको आधारमा प्रलयको समयलाई साअतसित तुलना गरिएको छ ।

[4](أرسى يُرسي) को अर्थ निर्धारण अथवा घटित हुनु हो अर्थात् यो प्रलय कहिले आउनेछ अथवा घटित हुनेछ ?

ثَقُلَتْ فِى السَّمٰوٰتِ وَالْاَرْضِ ۭ لَا تَاْتِيْكُمْ اِلَّا بَغْتَةً ۭ يَسْـَٔلُوْنَكَ كَاَنَّكَ حَفِيٌّ عَنْهَا ۭ قُلْ اِنَّمَا عِلْمُهَا عِنْدَ اللّٰهِ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ۝

प्रभुसित नै छ।[1] यसलाई यसको समयमा अल्लाह (तआला) बाहेक अन्य कोही प्रदर्शित गर्नेछैन । त्यो आकाशहरू तथा धर्तीको बहुत ठूलो (घटना) हुनेछ।[2] त्यो तिमीमाथि सहसा आइपर्नेछ । उनीहरू तपाईंसँग यसप्रकार सोध्छन्[3] जस्तो कि तपाईं त्यसको खोजी गरिसक्नु भएको छ । (तपाईं) भनिदिनुस् कि यसको ज्ञान विशेषरूपले अल्लाहसित नै छ, परन्तु धेरैले जान्दैनन् ।

قُلْ لَّآ اَمْلِكُ لِنَفْسِىْ نَفْعًا وَّلَا ضَرًّا اِلَّا مَا شَاۤءَ اللّٰهُ ۭ وَلَوْ كُنْتُ اَعْلَمُ الْغَيْبَ لَاسْتَكْثَرْتُ مِنَ الْخَيْرِ ۚ وَمَا مَسَّنِىَ السُّوْۤءُ ۚ اِنْ اَنَا اِلَّا نَذِيْرٌ وَّبَشِيْرٌ لِّقَوْمٍ يُّؤْمِنُوْنَ ۝

(१८८) (तपाईं) भनिदिनुस् कि स्वयं म आफ्नो विशेषको लागि कुनै लाभको अधिकार राख्दिन तथा न कुनै हानिको । परन्तु त्यति नै जति कि अल्लाहले चाहेको हुन्छ । तथा यदि म परोक्षका कुराहरू जानेको भए धेरै लाभ प्राप्त गर्न सक्थें तथा कुनै हानि मलाई पुग्न सक्दैनथ्यो ।[4] म त मात्र सचेत गराउने

[1]अर्थात् यसको निश्चित ज्ञान न कुनै फरिश्तालाई छ, न ईशदूतलाई छ, अल्लाहबाहेक यो ज्ञान कसैसित छैन, त्यसैले नै उसलाई समयमा घटित गर्नेछ ।

[2]यसको एउटा अन्य अर्थ यो हो कि यसको ज्ञान आकाश तथा धर्तीको लागि भारी छ, किनभने त्यो गुप्त छ तथा गुप्त कुरो हृदयहरूमा भारी हुन्छ ।

[3](حَفِيٌّ) (हफीय्युन) भन्दछन् आग्रह गरेर प्रश्न गर्नेलाई तथा खोज तलास गर्नेलाई । अर्थात यिनी तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) सित प्रलयको विषयमा यसप्रकार प्रश्न गर्दछन् जस्तो कि तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) ले प्रभुको पछि लागेर यस विषयमा अवश्य ज्ञान प्राप्त गर्नु भएको छ ।

[4]यो आयत यस कुराको लागि कति स्पष्ट छ कि नबी सल्लल्लाहु अलैहि वसल्लम अन्तयामी होइनन् । अन्तयामी मात्र अल्लाह तआला स्वयं छ । तर यो कुरा अत्याचार तथा अज्ञानको सीमाभन्दा अगाडि छ कि यस उपरान्त धर्ममा आधुनिकीकरण गर्नेहरू उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई अन्तयामी सिद्ध गर्न असफल प्रयास गर्दछन् । यद्यपि केही युद्धहरूमा उहाँका पवित्र दाँत पनि आहत भए, उहाँ सल्लल्लाहु अलैहि वसल्लमको मुख मण्डल पनि घाइते भयो ।

هُوَ الَّذِي خَلَقَكُم مِّن نَّفْسٍ وَاحِدَةٍ وَجَعَلَ مِنْهَا زَوْجَهَا لِيَسْكُنَ إِلَيْهَا فَلَمَّا تَغَشَّاهَا حَمَلَتْ حَمْلًا خَفِيفًا فَمَرَّتْ

तथा शुभसूचक हूँ, तिनीहरूका लागि जो विश्वास (आस्था) राख्दछन् ।

(१८९) त्यो अल्लाह तआला यस्तो छ जसले तिमीलाई मात्र एउटा व्यक्तिबाट सृष्टि गऱ्यो ।[1] तथा उसैबाट उसको जोडी बनायो ।[2] ताकि त्यसले आफ्नो त्यस जोडीबाट सन्तोष प्राप्त गरोस् ।[3]

तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि यो समुदाय कसरी उन्नति गर्नेछ जबकि यसले आफ्नो नबीको टाउकोलाई घाइते बनायो, (हदीसका किताबहरूमा यो घटना तथा निम्नलिखित घटनाहरू पनि लेखिएका छन्) आदरणीय आयशा (رضى الله عنها) माथि आक्षेप लाग्यो त उहाँ सल्लल्लाहु अलैहि वसल्लम पूरा एक महिनासम्म धेरै व्याकुल तथा अत्याधित दुःखी रहनु भयो । एक यहूदी आइमाईले तपाई सल्लल्लाहु अलैहि वसल्लम्लाई निमन्त्रणा दियो तथा खानामा विष मिसाइदियो, जसलाई तपाईले पनि चाख्नुभयो तथा सहाबाले पनि यहाँसम्मकि केही सहाबाको विषको कारणले मृत्यु भयो । तथा स्वयं नबी सल्लल्लाहु अलैहि बसल्लम सम्पूर्ण आयु यस विषको प्रभाव प्रतीत गरिरहनु भयो। यी तथा यसैप्रकारका अन्य घटनाहरू जसबाट स्पष्ट हुन्छ कि उहाँ सल्लल्लाहु अबसल्लमलाई अज्ञानवश दुःख पुग्यो, हानि खप्नुपऱ्यो, जसबाट कुरआनद्वारा कथित कुरो सत्य सिद्ध हुन्छ कि, "यदि म अन्तर्यामी भएको भए मलाई कुनै हानि पुग्ने थिएन ।"

[1]आदरणीय आदमबाट यसैकारण उनलाई प्रथम मनु तथा 'मानव-पिता' भनिन्छ ।

[2]यसबाट तात्पर्य आदरणीय हौवा हुन्, जो आदरणीय आदमकी पत्नी बनिन् । उनको उत्पत्ति आदरणीय आदमबाट भयो, जुन प्रकारले (مِنها) को सर्वनामबाट, जुन एक वचन प्रकट गर्दछ स्पष्ट छ । (विस्तारको लागि हेर्नुस् सूरः निसा आयत संख्या १ को व्याख्या)

[3]अर्थात् एक-अर्काबाट सुःख शान्ति प्राप्त गरोस् । यसकारण कि एउटा वर्ग आफ्नै वर्गसित अधिक निकट हुन्छ तथा प्रेम गर्न सक्दछ, जुन शान्ति प्राप्त गर्नको लागि आवश्यक छ । घनिष्टता नभई यो सम्भव छैन । अन्य स्थानमा अल्लाह तआलाको आदेश छ ।

﴿وَمِنْ ءَايَٰتِهِۦٓ أَنْ خَلَقَ لَكُم مِّنْ أَنفُسِكُمْ أَزْوَٰجًا لِّتَسْكُنُوٓا۟ إِلَيْهَا وَجَعَلَ بَيْنَكُم مَّوَدَّةً وَرَحْمَةً﴾

"अल्लाहका निशानीहरू मध्येबाट यो पनि छ कि उसले तिम्रो लागि तिमीमध्येबाटै (अथवा तिम्रो वर्गबाट नै) जोडी पैदा गऱ्यो ताकि तिमी उनीबाट शान्ति प्राप्त गर तथा तिमीहरू बीचमा उसले प्यार, प्रेम उत्पन्न गरिदियो ।" (सूरः रूम-२१)

अर्थात् अल्लाह तआलाले पुरूष तथा स्त्री दुबैमा एक-अर्काको लागि जुन आकर्षण तथा भावना राखेको छ । प्रकृतिको यो देन उनी जोडी बनेर पूरा गर्दछन् तथा एक-अर्काबाट घनिष्टता तथा प्रेम प्राप्त गर्दछन् ।

بِهٖ ۚ فَلَمَّآ اَثْقَلَتْ دَّعَوَا اللّٰهَ رَبَّهُمَا لَىِٕنْ اٰتَيْتَنَا صَالِحًا لَّنَكُوْنَنَّ مِنَ الشّٰكِرِيْنَ ﴿١٨٩﴾

अनि पतिले पत्नीसित समीपता गऱ्यो,[1] तब तिनले गर्भधारण गरिन्, हलुङ्गो जस्तो । अनि तिनले त्यसलाई लिएर हिंड्डुल गरिराखिन् ।[2] जब तिनी गह्रुङ्गोपनाको आभास गर्न थालिन्, त पति पत्नी दुबै अल्लाहसित जो उनीहरूको मालिक हो प्रार्थना गर्नथाले कि यदि तिमीले हामीलाई स्वस्थ सन्तान प्रदान गऱ्यौ भने हामी अति कृतज्ञता प्रकट गर्नेछौ ।[3]

فَلَمَّآ اٰتٰىهُمَا صَالِحًا جَعَلَا لَهٗ شُرَكَآءَ فِيْمَآ اٰتٰىهُمَا ۚ فَتَعٰلَى

(१९०) तथा जब अल्लाहले दुबैलाई स्वस्थ शिशु प्रदान गऱ्यो तब अल्लाहको बरदानमा ती दुबैले अल्लाहको साभ्की ठहराउन थाले ।[4]

अतः यो सत्य हो कि जुन आपसी प्रेम पति-पत्नी बीच हुन्छ, त्यो संसारको अन्य कुनै सम्बन्धमा हुँदैन ।

[1]अर्थात् यो मानव वंश यसप्रकार बढ्यो तथा अगाडि गएर जब उनीमध्येका एक साथी अर्थात् पति-पत्नीले एक-अर्कासित निकटता प्राप्त गरे । (تَغَشَّاها) को अर्थ 'पत्नीसँग सम्भोग गर्नु' हो । अर्थात् संभागेको लागि छोप्यो ।

[2]अर्थात् गर्भका आरम्भिक दिनहरूमा वीर्यबाट रगतका ग्रन्थिहरू बन्नुसम्म तथा रगत ग्रन्थिहरूबाट भ्रूण बन्नुसम्म गर्भ हलुङ्गो नै रहन्छ, प्रतीत पनि हुँदैन तथा स्त्रीलाई कुनै कठिनाई हुँदैन ।

[3]गह्रुङ्गो हुनुबाट तात्पर्य, जब बच्चा गर्भमा ठूलो हुन्छ, अनि जब जन्मको समय निकट आउँछ, माता-पिताका हृदयमा भय तथा शंका उत्पन्न हुँदैजान्छ । (विशेषरूपले जब स्त्रीलाई रोग हुन्छ) अर्थात् मनुष्यको प्रकृति छ कि भयको कारण अल्लाहतिर आकृष्ट हुन्छ । अतः ती दुबै अल्लाहसित प्रार्थना गर्दछन् तथा कृतज्ञता व्यक्त गर्नुको वचन दिन्छन् ।

[4]साभ्कीदार बनाउनुको तात्पर्य या त बच्चाको नाम यस्तो राख्नु हो, जस्तै इमाम बख्श, पीराँदत्ता, अब्दुशम्स, बन्दःअली आदि, जसबाट यो स्पष्ट हुन्छ कि बच्चा अमुक महात्मा, अमुक सन्तको (نعوذ بالله) कृपा दृष्टिको परिणाम हो अथवा आफ्नो यस विश्वासलाई प्रकट गर्दछ कि हामी त अमुक सन्त, महात्मा अथवा अमुक चिहाननिर गएका थियौं जसको परिणामले बच्चा जन्मियो । अथवा कुनै मृतकको नामको प्रसाद, भोग, प्रतिज्ञा आदि गराउँछ अथवा बच्चालाई कसैको कब्रनिर (चिहान) लगेर निधार टेकाउँछ कि उनको कृपाले बच्चा प्राप्त भयो ।

اللّٰهُ عَمَّا يُشْرِكُوْنَ ﴿١٩٠﴾

अत: अल्लाह पवित्र छ, उनीहरुद्वारा मिश्रण गर्नुबाट त्यसबाट जुन साक्षी उनीहरू ठहराउँछन् ।

اَيُشْرِكُوْنَ مَا لَا يَخْلُقُ شَيْـًٔا وَّهُمْ يُخْلَقُوْنَ ﴿١٩١﴾

(१९१) के यस्तालाई साझेदार ठहराउँछन्, जो कुनै वस्तुलाई बनाउन सक्दछन्, स्वयं उनलाई नै पैदा गरिएको हुन्छ ।

وَلَا يَسْتَطِيْعُوْنَ لَهُمْ نَصْرًا وَّلَآ اَنْفُسَهُمْ يَنْصُرُوْنَ ﴿١٩٢﴾

(१९२) तथा उनी तिनीहरूलाई न त कुनै प्रकारको सहायता दिन सक्दैनन्, र न उनीहरू आफ्नो सहायता गर्न सक्दछन् ।

وَاِنْ تَدْعُوْهُمْ اِلَى الْهُدٰى لَا يَتَّبِعُوْكُمْ ؕ سَوَآءٌ عَلَيْكُمْ اَدَعَوْتُمُوْهُمْ اَمْ اَنْتُمْ صَامِتُوْنَ ﴿١٩٣﴾

(१९३) र यदि तिमी उनीलाई सोझो मार्गतिर बोलाउँछौं भने उनी तिम्रो पछि आउने छैनन् ।[1] तिम्रो लागि दुबै कुरा समान छन् चाहे तिमी उनलाई पुकार अथवा मौन रह ।

اِنَّ الَّذِيْنَ تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ عِبَادٌ اَمْثَالُكُمْ فَادْعُوْهُمْ

(१९४) वास्तवमा तिमी अल्लाहलाई छाडि जसलाई पुकार्दछौ (उपासना गर्दछौ) उनी पनि तिमीजस्तै दास हुन् ।[2] तसर्थ तिमी उनलाई पुकार

यी सबै अवस्था अल्लाहका साझीदार बनाउँदा हुन्, जुन दुर्भाग्यले मुसलमानहरूमा सामान्यरूपले व्याप्त छ, आगामी आयतमा अल्लाह तआ़ला शिर्कको खण्डन गरिराखेको छ ।

[1]अथवा तिम्रा कुरा अनुसार कर्म गर्ने छैनन् । एउटा अन्य भावार्थ यसको यो पनि हो कि यदि तिमी उनीसित ज्ञान तथा मार्गदर्शन माँगदछौ भने उनी तिम्रो कुरा मान्ने छैनन्, न तिमीलाई कुनै उत्तर नै दिनेछन् । (फ़तहुल क़दीर)

[2]अर्थात जब उनी ज़ीवित थिए बरू अब त तिमी उनीभन्दा अधिक योग्य छौ । अब उनी देख्न सक्दैनन्, तिमी देख्न सक्छौ उनी सुन्न सक्दैनन्, तिमी सुन्दछौ । उनी कसैको कुरा बुझ्न सक्दैनन्, तिमी बुझ्दछौ । उनी उत्तर दिन सक्दैनन्, तिमी दिन्छौ । यसबाट ज्ञान भयो कि मूर्तिपूजक जसका मूर्तिहरू बनाएर पुज्दछन्, उनीहरू पनि पहिला अल्लाहका भक्त थिए अर्थात् मनुष्य नै थिए । जस्तो आदरणीय नूहको समुदायका पाँच मूर्तिको विषयमा सहीह बुख़ारीमा सविस्तार स्पष्ट छ कि उनी अल्लाहका परम भक्त थिए ।

فَلْيَسْتَجِيبُوا لَكُمْ إِن كُنتُمْ صَادِقِينَ ﴿١٩٤﴾

अनि उनलाई आवश्यक छ कि तिम्रो भनाई पूरा गरुन्, यदि तिमी साँचो हौ ।

أَلَهُمْ أَرْجُلٌ يَمْشُونَ بِهَا ۖ أَمْ لَهُمْ أَيْدٍ يَبْطِشُونَ بِهَا ۖ أَمْ لَهُمْ أَعْيُنٌ يُبْصِرُونَ بِهَا ۖ أَمْ لَهُمْ آذَانٌ يَسْمَعُونَ بِهَا ۗ قُلِ ادْعُوا شُرَكَاءَكُمْ ثُمَّ كِيدُونِ فَلَا تُنظِرُونِ ﴿١٩٥﴾

(१९५) के उनका खुट्टा छन् जसबाट उनीहरू हिंड्छन् अथवा उनका हात छन् जसबाट उनी कुनै कुरोलाई समात्छन् अथवा उनका आँखा छन् जसबाट देख्दछन् अथवा उनका कान छन् जसबाट उनी सुन्दछन् ।[1] (तपाईं) भनिदिनुस् कि तिमी आफ्ना सबै साझेदारहरूलाई बोलाऊ, अनि मलाई (हानि पुऱ्याउने) उपाय गर, अनि मलाई अलिकति पनि अवसर नदेऊ ।[2]

إِنَّ وَلِيِّيَ اللَّهُ الَّذِي نَزَّلَ الْكِتَابَ ۖ وَهُوَ يَتَوَلَّى الصَّالِحِينَ ﴿١٩٦﴾

(१९६) निःसन्देह मेरो सहायक अल्लाह नै छ, जसले यो धर्मशास्त्र (पवित्र कुरआन) अवतरित गऱ्यो तथा त्यो सदाचारी भक्तहरूको सहायता गर्दछ ।

وَالَّذِينَ تَدْعُونَ مِن دُونِهِ لَا يَسْتَطِيعُونَ نَصْرَكُمْ وَلَا أَنفُسَهُمْ يَنصُرُونَ ﴿١٩٧﴾

(१९७) तथा तिमी अल्लाहलाई छाडि जसलाई पुकार्दछौ । (उपासना गर्दछौ) तिनीहरू तिम्रो केही सहायता गर्न सक्दैनन् तथा न तिनीहरू आफ्नो सहायता गर्न सक्दछन् ।[3]

[1]अर्थात् जब यिनीहरूमध्ये कुनै पनि शक्ति उनीहरूमा छैन, मरे पश्चात नै देख्ने, सुन्ने, बुझ्ने तथा हिंड्ने शक्ति समाप्त भयो अब उनीसित सम्बन्धित या त ढुङ्गा अथवा काठको स्वयं बनाइएका मूर्तिहरू छन्, अथवा गुम्बद, कुब्बे तथा आस्तानाहरू छन्, जो उनका कब्र (चिहान) निर बनाइएका छन् । यसप्रकार धर्मको नाममा अधर्मको प्रचार-प्रसार भइराखेको छ ।

[2]अर्थात् यदि तिमी आफ्नो वाचामा साँचो हौ कि तिम्रा सहायता गर्नेछन्, त यिनीसित भन कि मेरा विरूद्ध षड्यन्त्र गरून् ।

[3]जो स्वयं आफ्नो सहायतामा सक्षम छैनन्, उनीहरू अन्यको सहायता के गर्न सक्लान् । जो स्वयं दरिद्र छ, त्यसबाट मद्दत माँग्नुको अर्थ के छ र ?

وَإِن تَدْعُوهُمْ إِلَى الْهُدَىٰ لَا يَسْمَعُوا ۖ وَتَرَاهُمْ يَنظُرُونَ إِلَيْكَ وَهُمْ لَا يُبْصِرُونَ ﴿١٩٨﴾

(१९८) तथा यदि उनीहरूलाई कुनै सोझो मार्गतिर बोलाउँछौ भने त्यसलाई सुन्ने छैनन् ।[1] तथा तपाईलाई उनीहरू यस्तो देखिन्छन् कि उनीहरू तपाईंलाई देखिराखेका छन् तथा उनीहरू केही पनि देख्दैनन् ।

خُذِ الْعَفْوَ وَأْمُرْ بِالْعُرْفِ وَأَعْرِضْ عَنِ الْجَاهِلِينَ ﴿١٩٩﴾

(१९९) तपाईं क्षमाको मार्ग अपनाउनुहोस् ।[2] पुण्यको कार्यको शिक्षा दिनुहोस् ।[3] तथा अशिक्षितहरूबाट अलग रहनुहोस् ।[4]

[1]यसको यही भावार्थ हो जुन आयत संख्या १९३ को हो ।

[2]केही आलिमहरूले यसको अर्थ यो भनेका छन् (خُذْ مَا عَفَالَكَ مِنْ أَمْوَالِهِمْ أى : مَا فَضَلَ) अर्थात् "जुन आवश्यकताभन्दा अधिक धन छ, त्यो लिउ ।" तथा यो ज़कातको अनिवार्यता भन्दा पूर्वको आदेश हो। (फ़तहुल बारी, भाग-८, पृष्ठ-३०५) तर अन्य व्याख्याकारहरूले यसलाई नैतिक निर्देश अर्थात् क्षमा गर्नु तात्पर्य लिएका छन् तथा इमाम जरीर तथा इमाम बुख़ारी आदिले यसैलाई प्राथमिकता दिएका छन् । अतः इमाम बुख़ारीले यसको पक्षमा आदरणीय उमर (رضى الله عنه) को एउटा घटनाको एक वर्णन गर्नु भएको छ। उयेनः बिन हिस्न आदरणीय उमर (رضى الله عنه) को सेवामा उपस्थित भए तथा आएर उनीमाथि टिप्पणी गर्नथाले कि उहाँ हामीलाई न त पूरा धन प्रदान गर्नुहुन्छ न त हाम्रो बीच न्याय गर्नुहुन्छ, अनि आदरणीय उमर (رضى الله عنه) क्रोधित भए। यो परिस्थिति देखेर आदरणीय उमर (رضى الله عنه) का सल्लाहकार हुर बिन क़ैसले (जो उयैनःका भतिज थिए) आदरणीय उमर (رضى الله عنه) सित भने कि अल्लाह तआलाले आफ्नो नबी (सल्लल्लाहु अलैहि वसल्लम) लाई आदेश दिइएको थियो । ﴿خُذِ الْعَفْوَ وَأْمُرْ بِالْعُرْفِ وَأَعْرِضْ عَنِ الْجَاهِلِينَ﴾ "क्षमाको मार्ग अपनाउनुस् तथा पुण्यको उपदेश दिनुस् एवं अज्ञानीहरूबाट बच्नुस् । तथा यो पनि अज्ञानीहरू मध्ये हो ।" जसपश्चात आदरणीय उमर (رضى الله عنه) ले क्षमा गरिदिनुभयो । "तथा आदरणीय उमर (رضى الله عنه) अल्लाहको किताबको आदेश सुनेर तुरून्त माथा (निधार) टेकिदिनु हुन्थ्यो ।" (सहीह बुख़ारी तफ़सीर सूरः अल-आराफ़) यसको समर्थन यी हदीसहरूबाट पनि हुन्छ, जसमा अत्याचारको सट्टा क्षमा गरिदिने, कष्टको साटो कृपा तथा नराम्रोको साटो राम्रो एवं उपकार गर्ने कुरोमा जोड दिइएको छ ।

[3](عُرْف) (उर्फ) सित तात्पर्य (مَعروف) (मारूफ़) अर्थात् पुण्य हो ।

[4]अर्थात् जब तपाईं पुण्यको कार्य गर्नुको आदेश दिनलाई पूर्णरूपले यसप्रकार समाप्त गर्नुहुन्छ कि उनीहरूको पासमा अब कुनै तर्क छैन तथा त्यस उपरान्त पनि मान्दैनन् भने, उनीहरूबाट विमुख हुनुस् तथा तिनका झगडा तथा मूर्खताहरूका उत्तर नदिनुस् ।

وَاِمَّا يَنۡزَغَنَّكَ مِنَ الشَّيۡطٰنِ نَزۡغٌ فَاسۡتَعِذۡ بِاللّٰهِ ؕ اِنَّهٗ سَمِيۡعٌ عَلِيۡمٌ ۝٢٠٠

(२००) तथा यदि तपाईंलाई शैतानको तर्फबाट कुनै शंका आउँछ भने अल्लाहको शरण माँग्ने गर्नुस् ।[1] निःसन्देह त्यो सर्वश्रोता तथा सर्वज्ञाता छ ।

اِنَّ الَّذِيۡنَ اتَّقَوۡا اِذَا مَسَّهُمۡ طٰٓئِفٌ مِّنَ الشَّيۡطٰنِ تَذَكَّرُوۡا فَاِذَا هُمۡ مُّبۡصِرُوۡنَ ۝٢٠١

(२०१) निःसन्देह जो अल्लाहसित तर्सन्छन्, जब उनलाई कुनै शंका शैतानतिरबाट आउँछ भने उनी स्मरणमा लाग्छन् । अतः सहसा उनका आँखाहरू खुल्दछन् ।[2]

وَاِخۡوَانُهُمۡ يَمُدُّوۡنَهُمۡ فِى الۡغَىِّ ثُمَّ لَا يُقۡصِرُوۡنَ ۝٢٠٢

(२०२) तथा जो शैतानहरूका अनुगामी छन् उनी उनलाई विपदातिर तान्दछन् अनि तिनी रोकिदैनन् ।[3]

وَاِذَا لَمۡ تَاۡتِهِمۡ بِاٰيَةٍ قَالُوۡا لَوۡلَا اجۡتَبَيۡتَهَا ؕ قُلۡ اِنَّمَاۤ اَتَّبِعُ مَا يُوۡحٰٓى اِلَىَّ مِنۡ رَّبِّىۡ ۚ هٰذَا

(२०३) तथा जब तपाईं कुनै चमत्कार उनको अगाडि प्रस्तुत गर्नुहुन्न तब उनी भन्दछन् कि तपाईंले यो चमत्कार किन ल्याउनु भएन ।[4] (तपाईं) भनिदिनुस् कि म त्यसको पालना गर्दछु

[1]तथा यसबेला यदि शैतान तपाईंलाई उत्तेजित गर्न प्रयास गर्दछ भने अल्लाहको शरण माग्नुस् ।

[2]यसमा अल्लाहसित तर्सनेहरूका सम्बन्धमा भनिएको छ कि उनी शैतानबाट सावधान रहन्छन् । (طائف) अथवा (طَيفٌ) त्यस मानसिक विचारहरूलाई भन्दछन् जो हृदयमा आउँछन् अथवा स्वप्नमा आउँछन् । यहाँ त्यसलाई शैतानद्वारा पारिएका शंकाहरूका लागि प्रयोग गरिएको छ, किनभने शैतानद्वारा शंकाहरू पनि मानसिक विचारहरूमै उत्पन्न हुन्छन् । (फ़तहुल क़दीर)

[3]अर्थात् शैतान क़ाफिरहरूलाई पथ-विचलनतिर तान्दछ, अनि ती क़ाफिर (विचलनतिर जानुमा) अथवा शैतान उनलाई लैजानमा आनाकानी गर्दैन । अर्थात् (لا يُقصرون) क्रियाका कर्ता अधर्मी पनि बन्न सक्दछन् तथा "शैतान" पनि ।

[4]तात्पर्य यस्तो चमत्कार हो जुन उनको भनाईमा उनको इच्छा अनुसार प्रदर्शित गरियोस् जस्तै उनका केही मागहरूको सूरः बनी इस्राईल आयत ९० देखि ९३ सम्ममा चर्चा गरिएको छ ।

بَصَآئِرُ مِن رَّبِّكُمۡ وَهُدًى وَرَحۡمَةٌ لِّقَوۡمٍ يُؤۡمِنُونَ ﴿٢٠٣﴾

जुन मलाई मेरो प्रभुको तर्फबाट आदेश पठाइएको छ । यो तिम्रो पालनकर्ताको तर्फबाट अर्न्तदृष्टिहरूको प्रकाशपुञ्ज हो तथा ईमान स्थापित गर्नेहरूका लागि मार्गदर्शन र दयालुता हो ।[1]

وَإِذَا قُرِئَ ٱلۡقُرۡءَانُ فَٱسۡتَمِعُواْ لَهُۥ وَأَنصِتُواْ لَعَلَّكُمۡ تُرۡحَمُونَ ﴿٢٠٤﴾

(२०४) तथा जब कुर्आन पढिन्छ तब त्यसलाई ध्यानपूर्वक सुन एवं मौन रह । आशा छ कि तिमीमाथि दया गरियोस् ।[2]

---

[1](لولا اجتبيتها) को अर्थ हो कि तिमी स्वयं आफ्नै पासबाट किन बनाएर ल्याउँदैनौ । यसको उत्तरमा आदेश भयो कि तपाईं भनिदिनुस्, चमत्कार प्रस्तुत गर्नु मेरो वशमा छैन । म त अल्लाहका प्रकाशनाहरू (वह्यी) को पालना गर्नेवाला हूँ । हो, यो कुरआन जुन मेरो पासमा आएको छ, यो स्वयं नै एउटा ठूलो चमत्कार हो । यसमा तिम्रो प्रभुको तर्फबाट निर्देश (सूचनाहरू तथा शुभ-सन्देश) तथा मार्गदर्शन एवं कृपा यदि कोही ईमान भएको छ भने ।

[2]यहाँ काफ़िरहरूलाई भनिंदैछ जो कुरआन पढिदा हल्ला गर्थे तथा आफ्ना साथीहरूलाई भन्थेः

﴿لَا تَسۡمَعُواْ لِهَٰذَا ٱلۡقُرۡءَانِ وَٱلۡغَوۡاْ﴾

"यो कुर्आन न सुन तथा त्यसमा हल्ला गर ।" (सूरः हा.मीम.सजदः-२६)

उनीसित भनिंदैछ कि यसको सट्टा यदि ध्यानपूर्वक सुन्दछौ तथा शान्त रहन्छौ भने शायद अल्लाह तआला तिमीलाई मार्गदर्शन प्रदान गरोस् । यसप्रकार तिमी अल्लाहको कृपाको अधिकारी होऊ ।

केही विद्वान यसलाई सामान्य रूपले लिन्छन् अर्थात जुनबेला कुरआन पढिन्छ चाहे नमाज़ होस् अथवा नमाज़ नहोस् सबैलाई शान्त भई सुन्ने आदेश छ । यस सामान्य आदेशबाट भाव निकालेर जोडसित पढिने नमाज़हरूमा मुक्तदी (नमाज़मा इमामको अतिरिक्त सबै नमाजीहरूलाई भन्दछन्) बाट सूरः फ़ातिहा पढ्नुलाई पनि कुर्आनको यस आदेशको विरूद्ध मान्दछन् । जबकि उच्च स्वरमा पढिने नमाज़हरूमा इमामको पछाडि सूरः फ़ातिहा पढ्नको लागि आदेश नबी सल्लल्लाहु अलैहि वसल्लमबाट सहीह हदीसहरूमा सिद्ध छ, जस्तो कि यसको मक्की हुनुबाट पनि सिद्ध हुन्छ । परन्तु यसलाई सामान्य रूपले माने पनि यस सामान्यबाट मुक्तदिहरूलाई नबी सल्लल्लाहु अलैहि वसल्लमले निकालिदिनु भयो । तथा यसप्रकार यस आयतको सामान्य हुनुको उपरान्त पनि उच्च स्वरले पढिने नमाज़मा मुक्तदिहरूलाई सूरः फ़ातिहा अवश्य पढ्नु पर्नेछ ।

وَاذْكُرْ رَّبَّكَ فِىْ نَفْسِكَ تَضَرُّعًا وَّخِيْفَةً وَّدُوْنَ الْجَهْرِ مِنَ الْقَوْلِ بِالْغُدُوِّ وَالْاٰصَالِ وَلَا تَكُنْ مِّنَ الْغٰفِلِيْنَ ۝٢٠٥

(२०५) तथा हे मानव ! आफ्नो मनमा विनीत एवं भयभीत भई हल्का स्वरले आफ्नो पोषकलाई स्मरण गरिराख तथा उनीहरू मध्येबाट नहुनु जो निष्कर्म भइ बसेका छन् ।

اِنَّ الَّذِيْنَ عِنْدَ رَبِّكَ لَا يَسْتَكْبِرُوْنَ عَنْ عِبَادَتِهٖ وَيُسَبِّحُوْنَهٗ وَلَهٗ يَسْجُدُوْنَ ۩ ۝٢٠٦

(२०६) नि:सन्देह जो तिम्रो पोषकको समीप छन् उनी त्यसको उपासनाबाट अहंकार गर्दैनन् । तथा उसको पवित्रताको वर्णन तथा उसको सजदा (ढोग) गर्दछन् ।

## سُوْرَةُ الْاَنْفَالِ

## सुरतुल् अन्फ़ाल-८

सूरः अन्फाल मदीनामा अवतरित भएको हो तथा यसका पचहत्तर आयत एवं दस रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु, जो अत्यन्त कृपालु तथा अत्यन्त दयालु छ ।

---

किनभने कुरआनको यस सामान्य आदेशबाट मुक्तदिहरूको छुटको निम्ति सहीह हदीस तथा ठोस हदीसहरूबाट सिद्ध हुन्छ । जुन प्रकार कुरआनको अन्य सामान्यरूपले आदेशित आयतहरूमा केहीलाई छुट प्राप्त छ त्यसैप्रकार यस आयतलाई पनि मान्यता प्राप्त छ । जस्तै ﴿اَلزَّانِيَةُ وَالزَّانِيْ فَاجْلِدُوْا﴾ (सूरः नूर-२) को सामान्य आदेश विवाहित व्यभिचारी निष्कासित छन्, तथा السارق والسارقة को सामान्य आदेशबाट यस्ता चोर निष्कासित छन् जसले चौथाई दीनारभन्दा कम मूल्यको कुरो को चोरी गरेका हुन्छन् अथवा चोरी गरिएको कुरो सुरक्षामा नराखिएको होस् आदि । यसैप्रकार ﴿فَاسْتَمِعُوْا لَهٗ وَاَنْصِتُوْا﴾ को सामान्य आदेशबाट मुक्तदी निष्कासित हुनेछन् । तथा उनका लागि पनि उच्च स्वरमा पढिने नमाज़हरूमा पनि सूरः फ़ातिहा पढ्नु आवश्यक हुनेछ किनभने नबी सल्लल्लाहु अलैहि वसल्लमले यसमा जोडदिनु भएको छ (जस्तो कि सूरः फ़ातिहाको व्याख्यामा यी हदीसहरू वर्णन गाएिका छन्) ।

يَسْـَٔلُونَكَ عَنِ الْأَنْفَالِ ۖ قُلِ الْأَنْفَالُ لِلَّهِ وَالرَّسُولِ ۖ فَاتَّقُوا اللَّهَ وَأَصْلِحُوا ذَاتَ بَيْنِكُمْ ۖ وَأَطِيعُوا اللَّهَ وَرَسُولَهُ إِنْ كُنْتُمْ مُؤْمِنِينَ ①

(१) यिनीहरू तपाईंसित युद्धमा प्राप्त मालको विषयमा सोध्दछन् ।[1] तपाईं भनिदिनुस् कि ती युद्धबाट प्राप्त माल अल्लाहका हुन् तथा रसूलका हुन् ।[2] यसकारण तिमी अल्लाहसित तर्स तथा आफ्ना बीचका सम्बन्धहरूलाई सुधार तथा अल्लाह एवं त्यसका रसूलको आज्ञाको पालन गर, यदि तिमी ईमान भएका हौ ।[3]

إِنَّمَا الْمُؤْمِنُونَ الَّذِينَ إِذَا ذُكِرَ اللَّهُ وَجِلَتْ قُلُوبُهُمْ وَإِذَا تُلِيَتْ عَلَيْهِمْ آيَاتُهُ زَادَتْهُمْ إِيمَانًا وَعَلَىٰ رَبِّهِمْ يَتَوَكَّلُونَ ②

(२) केवल ईमान भएका नै यस्ता हुन्छन् कि जब अल्लाह (तआ़ला) को वर्णन हुन्छ, तब उनीहरूका हृदय भयभीत हुन्छन् । तथा जब अल्लाहका आयतहरू उनलाई पढेर सुनाइन्छन्, तब ती आयतहरू उनका ईमानलाई झन् अधिक गरिदिन्छन् ।

[1](أنفال) शब्द (نَفَل) शब्दको बहुवचन हो, जसको अर्थ हो अधिक । यी त्यस्ता माल सामग्रीलाई भनिन्छ, जुन काफिरहरूका विरूद्ध युद्धमा प्राप्त हुन्छ, यसलाई अंफाल यसकारण भनिन्छ किनभने यो ती कुराहरू मध्येबाट हो जुन पूर्वका समुदायहरूका लागि निषेध थियो । अर्थात् यो मुसलमानहरूका लागि एउटा अधिक वस्तु मान्य गरिएको छ अथवा यसकारण कि यो धर्मयुद्धको प्रतिफल भन्दा (जुन परलोकमा प्राप्त हुनेछ) एउटा अधिक कुरो हो, जुन कैयन् पटक संसारमै प्राप्त हुन्छ ।

[2]अर्थात् यसको निर्णय गर्नाको अधिकारी हुन् । अल्लाहका रसूल, अल्लाहको आदेशले यसलाई विभाजित गर्नेछन्, न कि तिमी आपसमा जुन जसरी चाहन्छौ विभाजित गर ।

[3]यसको अर्थ यो भयो कि वर्णित तीनवटै कुराका अनुसार कर्म नगरीकन ईमान पूर्ण हुँदैन । यसबाट अल्लाहको भय (तक़्वा), आपसमा सम्बन्धहरूको सुधार, तथा अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लमको आज्ञापालनको विशेषतालाई स्पष्ट गरिएको छ । विशेषरूपले युद्धमा प्राप्त सामग्रीको बाँडफाँडमा यी तीनटै कुरालाई ध्यानमा राख्नु अनिवार्य छ । किनभने मालको विभाजनमा आपसी सम्बन्धहरूलाई बिगार्नुको अधिक भ्रम रहन्छ, यसैले आपसी सम्बन्धलाई सुधार्नमा जोड दिइएको छ । हेराफेरी तथा विश्वासघातको सम्भावना रहन्छ भने त्यसको समाधान अल्लाह तथा अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लमको अनुकरणमा आधारित छ ।

तथा उनीहरू आफ्नो प्रभुमा भरोसा गर्दछन् ।[1]

[1]यी आयतहरूमा निष्ठावानहरूका (ईमान भएका) चार गुण भनिएका छन् । (१) यिनीहरू अल्लाह तथा त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लमको आज्ञाको पालना गर्दछन्, न कि मात्र अल्लाहको अर्थात् कुरआनको, (२) अल्लाहको वर्णन सुनेर त्यसको शक्ति तथा महिमाबाट प्रभावित भई हृदयहरू काम्छन्, (३) कुरआन पढ्नाले उनका ईमानमा बृद्धि हुन्छ, (४) उनीहरू आफ्ना प्रभुमा भरोसा गर्दछन् । तवक्कुलको अर्थ हो कि प्राप्त साधनहरूलाई अपनाउनुका उपरान्त अल्लाहमा भरोसा गर्दछन् । अर्थात् प्राप्त साधनबाट मुख फर्काउँदैनन् किनभने उनलाई अपनाउन अल्लाहले आदेश दिएको छ, तर प्राप्त साधनहरूलाई नै सबैथोक ठान्दैनन्, बरू उनीहरूलाई यो पूर्ण विश्वास हुन्छ कि वास्तविक रूपले गर्नेवाला अल्लाह नै हो, यसकारण जबसम्म अल्लाहको इच्छा हुनेछैन, यिनी प्राप्त साधन केही गर्न सक्दैनन् तथा कृपा प्राप्त गर्नका लागि एक छिनको लागि पनि असावधान हुँदैनन् । अगाडि यिनका अन्य गुणहरूको वर्णन छ तथा यी गुणहरूले अलंकृत मानिसहरूको लागि अल्लाहको तर्फबाट साँचो मुसलमान हुनुको प्रमाणपत्र तथा मोक्ष एवं कृपा तथा पवित्र जीविकाको शुभ-सूचना हो । (अल्लाह तआला हामीलाई पनि उनीहरूमा सम्मिलित गर)

<u>बद्रको युद्धको दृश्य:</u> बद्रको युद्ध सन् २ हिजरीमा काफ़िरहरूसँग मुसलमानहरूको प्रथम युद्ध थियो । यसको अतिरिक्त यो बिना कुनै योजना तथा तयारी एक्कासि भयो । यसको अतिरिक्त बिना साधन-सामग्रीका कारण केही मुसलमान बौद्धिक रूपले यसको लागि तयार पनि थिएनन् । सारांशमा त्यसको दृश्य यसप्रकार छ कि आदरणीय अबू सुफ़ियान (जो अझै मुसलमान भएका थिएनन्) को नेतृत्वमा एउटा व्यापारिक काफ़िला सीरियाबाट मक्का गइराखेको थियो, मुसलमानहरूको पनि धेरैजसो माल-सामग्री मक्कामा हिज़रतको कारण रहेको थियो अथवा क़ाफिरहरूले खोसिहालेका थिए । यसका अतिरिक्त काफ़िरको शक्ति तथा अभियानलाई तोड्नु पनि समयको माँग थियो । यी सबै कुराहरूका कारण रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले त्यस समूहमाथि आक्रमण गर्न योजना बनाउनु भयो तथा मुसलमान यस विचारले मदीनाबाट हिडे । अबू सुफ़ियानलाई पनि यस कुराको सूचना प्राप्त भयो । अत: उनले आफ्नो मार्ग वदलिदिए तथा मक्कामा सूचना पठाइदिए, जसको कारण अबूजहल एउटा सेना लिएर आफ्नो काफिलाको सुरक्षाको निम्ति निस्क्यो । नबी सल्लल्लाहु अलैहि वसल्लमलाई यस कुरोको सूचना पुग्यो, त यो कुरा सहाबाका समक्ष राख्नुभयो तथा अल्लाहको वचन पनि भन्नुभयो कि यी दुबै (व्यापारिक काफ़िला तथा सेना) मध्येबाट एउटा तिमीलाई अवश्य प्राप्त हुनेछ । तैपनि केही सहाबाले असमंजस्यको प्रदर्शन गरे तथा व्यापारिक काफ़िलालाई पछ्याउन सल्लाह दिए, जबकि अन्य सहाबाले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका साथमा युद्ध लड्नका लागि

الَّذِيْنَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَمِمَّا رَزَقْنٰهُمْ يُنْفِقُوْنَ ۝

(३) जो कि नमाज़ नियमित रूपले पढ्छन् तथा हामीले जे-जति उनलाई दिएका छौं उनीहरू त्यसबाट खर्च गर्दछन् ।

اُولٰٓئِكَ هُمُ الْمُؤْمِنُوْنَ حَقًّا ؕ لَهُمْ دَرَجٰتٌ عِنْدَ رَبِّهِمْ وَمَغْفِرَةٌ وَّرِزْقٌ كَرِيْمٌ ۝

(४) सच्चा ईमान भएका यी नै हुन्, उनका लागि ठूला पद छन्, उनका प्रभुको पासमा तथा मोक्ष एवं सम्मानको जीविका छ ।

كَمَآ اَخْرَجَكَ رَبُّكَ مِنْۢ بَيْتِكَ بِالْحَقِّ ۪ وَاِنَّ فَرِيْقًا مِّنَ الْمُؤْمِنِيْنَ لَكٰرِهُوْنَ ۝

(५) जस्तो कि तपाईंको प्रभुले तपाईंको घरबाट सत्यकासाथ तपाईंलाई निकाल्यो,[1] तथा मुसलमानहरूको एक गुट यसलाई अप्ठ्यारो ठान्दथ्यो ।[2]

يُجَادِلُوْنَكَ فِى الْحَقِّ بَعْدَ مَا تَبَيَّنَ كَاَنَّمَا يُسَاقُوْنَ اِلَى الْمَوْتِ وَهُمْ يَنْظُرُوْنَ ۝

(६) उनीहरू स्पष्ट भए पश्चात[3] सत्यको विषयमा तपाईंसित झगडा गरिराखेका थिए मानो उनी मृत्युतिर धपाइराखिएका हुन् तथा (त्यसलाई) देखिराखेका हुन् ।[4]

पूर्ण समर्थनको विश्वास दिलाए । यसैकारण यी आयतहरू अवतरित भए ।

[1]अर्थात् जुनप्रकार युद्धमा प्राप्त माल-सामग्रीको बाँडफाँडको समस्या मुसलमानहरू बीच मतभेदको कारण बनेको थियो अनि त्यसलाई अल्लाह तथा त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लमलाई सुम्पिएको थियो, त त्यसैमा मुसलमानहरूको भलाई थियो । त्यसैप्रकार तपाईंको मदीनाबाट निस्कनु, तथा अगाडि गएर व्यापारिक काफ़िलाको सट्टा कुरैशको सेनासित भिडन्त हुनु, यद्यपि केही आज्ञाकारिहरूलाई उचित लागेको थिएन, परन्तु यसमा पनि मुसलमानहरूलाई अन्ततः लाभ थियो ।

[2]यो अप्रसन्नता कुरैशको सेनासित लड्ने विषयमा थियो, जसलाई केही मानिसहरूले नै प्रकट गरे तथा यसका कारणले पनि साधन विहीन हुनु थियो

[3]अर्थात यो कुरो स्पष्ट भएको थियो कि क़ाफ़िला त बचेर निस्किसकेको छ तथा अब कुरैशको सेना नै सामु छ, जससित लडाई रोक्ने असम्भव छ ।

[4]यो बिना साधन-सामग्रीको अवस्थामा लड्नुको कारणले केही मुसलमानहरूको जुन अवस्था थियो, यसको प्रदर्शन हो ।

وَإِذْ يَعِدُكُمُ اللَّهُ إِحْدَى الطَّائِفَتَيْنِ أَنَّهَا لَكُمْ وَتَوَدُّونَ أَنَّ غَيْرَ ذَاتِ الشَّوْكَةِ تَكُونُ لَكُمْ وَيُرِيدُ اللَّهُ أَنْ يُحِقَّ الْحَقَّ بِكَلِمَاتِهِ وَيَقْطَعَ دَابِرَ الْكَافِرِينَ ﴿٧﴾

(७) तथा तिमीहरू त्यस समयलाई स्मरण गर जबकि अल्लाहले तिमीसित ती दुई गुटहरूमध्ये एकलाई वचन दिंदै थियो कि त्यो तिम्रो हातमा आउनेछ ।[1] तथा तिमी यस आशामा थियौ कि हथियार नभएको गुट तिम्रो हातमा आओस् ।[2] तथा अल्लाह तआलालाई स्वीकार थियो कि आफ्नो आदेशले सत्यलाई सत्य हुने कुरो सिद्ध गरोस् तथा ती काफिरहरूको जरा काटिदेओस् ।

لِيُحِقَّ الْحَقَّ وَيُبْطِلَ الْبَاطِلَ وَلَوْ كَرِهَ الْمُجْرِمُونَ ﴿٨﴾

(८) ताकि सत्यलाई सत्य हुने एवं असत्यलाई असत्य हुनु सिद्ध गरिदेओस्, चाहे यी अपराधीहरूले नरूचाउन् ।[3]

إِذْ تَسْتَغِيثُونَ رَبَّكُمْ فَاسْتَجَابَ لَكُمْ أَنِّي مُمِدُّكُمْ بِأَلْفٍ مِنَ الْمَلَائِكَةِ مُرْدِفِينَ ﴿٩﴾

(९) त्यस समयलाई याद गर जबकि तिमी आफ्नो पालनकर्तासित विन्ती गरिराखेका थियौ, अनि अल्लाह तआलाले तिम्रो कुरा सुन्यो त्यसले भन्यो म तिमीलाई एक हजार स्वर्ग दूतहरूबाट सहायता दिनेछु जो निरन्तर आउनेछन् ।[4]

[1]अर्थात् या त व्यापारिक काफ़िला तिमीलाई प्राप्त हुनेछ, जसबाट तिमीलाई लडाई विना अत्याधिक माल-सामग्री प्राप्त हुनेछ, दोस्रो अवस्थामा कुरैशको सेनाबाट तिम्रो भिडन्त हुनेछ तथा तिम्रो विजय हुनेछ तथा युद्धबाट प्राप्त माल-सामग्री उपलब्ध हुनेछ ।

[2]अर्थात व्यापारिक क़ाफ़िला (समूह), ताकि नलडिकनै माल हात लागोस् ।

[3]परन्तु अल्लाह यसको विपरीत यो चाहन्छ कि कुरैशको सेना तिम्रो युद्ध होस्, ताकि क़ाफिरहरूको शक्ति तथा गर्वलाई धक्का पुगोस्, चाहे यो कुरो अपराधिहरू (मूर्तिपूजकहरू) को लागि अप्रिय नै होस् ।

[4]यस युद्धमा मुसलमानहरूको संख्या ३१३ थियो, जबकि काफ़िर उनका तीन गुना (अर्थात) लगभग एक हजार थिए, अनि मुसलमान निहत्था तथा अस्त्र-शस्त्रहीन थिए, जबकि काफ़िरहरूसित अस्त्र-शस्त्रहरूको अधिकता थियो । यी परिस्थितिहरूमा मुसलमानहरूलाई सहारा केवल अल्लाहकै शक्तिको थियो, जोसित उनी विनम्र निवेदन एवं विन्ति गरिराखेका थिए, स्वयं नबी करीम सल्लल्लाहु अलैहि वसल्लम एउटा खेमा (पाल) मा आग्रह पूर्ण विनय

وَمَا جَعَلَهُ اللَّهُ إِلَّا بُشْرَىٰ وَلِتَطْمَئِنَّ بِهِ قُلُوبُكُمْ ۚ وَمَا النَّصْرُ إِلَّا مِنْ عِندِ اللَّهِ ۚ إِنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ⑩

(१०) तथा अल्लाह (तआला) ले यो सहायता मात्र यसकारण गर्‍यो कि शुभ-सूचना होस् तथा तिम्रा हृदयहरूलाई सन्तोष होस्। तथा विजय मात्र अल्लाहतिर बाट हुन्छ।[1] जो कि अत्याधिक शक्तिशाली, विवेकशील छ।

إِذْ يُغَشِّيكُمُ النُّعَاسَ أَمَنَةً مِّنْهُ وَيُنَزِّلُ عَلَيْكُم مِّنَ السَّمَاءِ مَاءً لِّيُطَهِّرَكُم بِهِ وَيُذْهِبَ عَنكُمْ رِجْزَ الشَّيْطَانِ وَلِيَرْبِطَ عَلَىٰ قُلُوبِكُمْ وَيُثَبِّتَ بِهِ الْأَقْدَامَ ⑪

(११) त्यस समयलाई स्मरण गर, जबकि (अल्लाह तआला) आफूतिरबाट शान्ति प्रदान गर्नको निम्ति तिमीमाथि ऊँघ (निन्द्रा) आच्छादित गरिराखेको थियो।[2] तथा तिमीमाथि आकाशबाट पानी वर्षाइराखेको थियो ताकि यस पानीद्वारा तिमीलाई पवित्र गरोस् तथा तिमीबाट शैतानी शंकाहरूलाई हटाओस्।[3]

पूर्वक प्रार्थनामा लीन हुनुहन्थ्यो (सहीह बुख़ारी किताबुल मग़ाज़ी)। अतः अल्लाह तआलाले प्रार्थनाहरू स्वीकार गर्‍यो तथा एक हजार फरिश्ताहरू एक-अर्काको पछाडि निरन्तर मुसलमानहरूको सहायताका लागि आए।

[1]अर्थात फरिश्ताहरूलाई अवतरित गर्नु त मात्र शुभ-सूचना तथा तिम्रा हृदयको शान्तिको लागि थियो, अपितु मूल सहायता त अल्लाहतिरबाट थियो। जो फरिश्ता नभएपनि तिम्रो सहायता गर्न सक्दथ्यो, तैपनि यसबाट यो ठान्नु पनि उचित छैन कि फरिश्ताहरूले युद्धमा भाग लिएनन. हदीसहरूबाट ज्ञात हुन्छ कि फरिश्ताहरूले भाग लिए तथा कैयन् काफ़िरहरूलाई वध पनि गरे, (हेर्नुस् सहीह बुख़ारी तथा सहीह मुस्लिम किताबुल मग़ाज़ी व फ़ज़ायेल अस्सहाबा)

[2]उहुदको युद्धमा जस्तै बद्रको युद्धमा पनि अल्लाह तआलाले मुसलमानहरूमाथि ऊँघ प्रभावशाली गरिदियो, जसबाट अनेकौं हृदयहरूका भार (बोझ) हलुङ्गो भए तथा सन्तोष एवं शान्तिको एक विशेष अवस्था उनीमाथि प्रभावी भयो।

[3]तेस्रो उपहार यो प्रदान गर्‍यो कि वर्षा गरिदियो, जसबाट एक त बालुवामा आवागमन सरल भयो, दोस्रो वुज़ू तथा पवित्रतामा सरलता भयो। तेस्रो यसबाट शैतानी शंकाहरूको खण्डन गर्‍यो, जुन त्यसले ईमानवालाका हृदयमा पारिराखेको थियो कि तिमी अल्लाहका राम्रा भक्त हुँदा-हुँदैपनि पानीबाट टाढा छौ, दोस्रो अपवित्रताको अवस्थामा तिमी लड्छौ भने कसरी अल्लाहको कृपा तथा दया तिमीलाई प्राप्त हुनेछ ? तेस्रो तिमी तिर्खाएका हौ, जबकि तिम्रा शत्रुहरूको पासमा पानी छ इत्यादि।

तथा तिम्रा हृदयहरूलाई दृढ गरोस् तथा तिम्रा खुट्टाहरूलाई स्थिर गरोस् ।[1]

اِذْ يُوْحِىْ رَبُّكَ اِلَى الْمَلٰٓئِكَةِ اَنِّىْ مَعَكُمْ فَثَبِّتُوا الَّذِيْنَ اٰمَنُوْا ؕ سَاُلْقِىْ فِىْ قُلُوْبِ الَّذِيْنَ كَفَرُوا الرُّعْبَ فَاضْرِبُوْا فَوْقَ الْاَعْنَاقِ وَاضْرِبُوْا مِنْهُمْ كُلَّ بَنَانٍ ؕ﴿۱۲﴾

(१२) त्यस समयलाई स्मरण गर, जबकि तपाईंको प्रभुले फरिश्ताहरूलाई आदेश दिइराखेको थियो कि म तिम्रो साथमा छु, यसकारण तिमी ईमान भएकाको साहस बढाउ । म अहिले काफ़िरहरूका हृदयमा भय पारिदिन्छु ।[2] यसकारण गर्दनहरूमा प्रहार गर र जोर्नीहरूमा चोट पुऱ्याउ ।[3]

ذٰلِكَ بِاَنَّهُمْ شَآقُّوا اللّٰهَ وَرَسُوْلَهٗ ۚ وَمَنْ يُّشَاقِقِ اللّٰهَ وَرَسُوْلَهٗ فَاِنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ﴿۱۳﴾

(१३) यो यस कुराको दण्ड हो कि उनीहरूले अल्लाहको तथा त्यसका रसूलको विरोध गरे तथा जो अल्लाहको तथा त्यसका रसूलको विरोध गर्दछ, त अल्लाह तआलाले कडा सजाय दिनेछ ।

ذٰلِكُمْ فَذُوْقُوْهُ وَاَنَّ لِلْكٰفِرِيْنَ عَذَابَ النَّارِ ﴿۱۴﴾

(१४) त यो दण्डको स्वाद चाख तथा ध्यान रहोस् कि काफ़िरहरूका लागि नरकको यातना निर्धारित छ ।



[1]यो चौथो उपहार हो जसले हृदयहरूमा दृढता प्रदान गऱ्यो ।

[2]यो अल्लाह तआलाले फरिश्ताहरूद्वारा तथा विशेषरूपले आफ्नो तर्फबाट जुन-जुन प्रकारले मुसलमानहरूलाई बद्रमा सहायता गऱ्यो, त्यसको वर्णन हो ।

[3](بَنَان) (बनान) को अर्थ हात तथा खुट्टाका औंलाहरुका टुप्पा हुन् । अर्थात् यी किनाराहरू काटिन्छन् भने स्पष्ट छ कि उनी विवश हुनेछन् । यसप्रकार उनी हातबाट तलवार चलाउन तथा खुट्टाहरूले भाग्ने योग्य हुने छैनन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓاْ إِذَا لَقِيتُمُ ٱلَّذِينَ كَفَرُواْ زَحۡفٗا فَلَا تُوَلُّوهُمُ ٱلۡأَدۡبَارَ ١٥

(१५) हे ईमान भएका ! जब तिमी काफ़िरहरूसित मुठभेड़ (मुकाबिला) गर्छौ तब उनीहरूबाट पिठ्यूँ नफर्काउनु ।[1]

وَمَن يُوَلِّهِمۡ يَوۡمَئِذٖ دُبُرَهُۥٓ إِلَّا مُتَحَرِّفٗا لِّقِتَالٍ أَوۡ مُتَحَيِّزًا إِلَىٰ فِئَةٖ فَقَدۡ بَآءَ بِغَضَبٖ مِّنَ ٱللَّهِ وَمَأۡوَىٰهُ جَهَنَّمُۖ وَبِئۡسَ ٱلۡمَصِيرُ ١٦

(१६) तथा जुन व्यक्ति उनीहरूबाट त्यस अवसरमा पिठ्यूँ फर्काउनेछ, परन्तु यदि कोही लडाईंको लागि युद्धचाल चलिराखेको हुन्छ अथवा आफ्नो गुटतिर शरण लिन आइराखेको छ, (त्यो अर्कै कुरा हो)[2] शेष अन्य जो यस्तो गर्नेछ त्यो अल्लाहको क्रोधको भागी हुनेछ । तथा त्यसको बास स्थान नरक हुनेछ तथा त्यो साह्रै नै नराम्रो ठाउँ हो ।[3]

---

[1](زحفاً) (ज़हफन) शब्दको अर्थ हो एक-अर्काको सामु हुनु तथा संघर्ष गर्नु । अर्थात् मुसलमान तथा क़ाफिर जब सम्मुख भई युद्धका लागि तयार हुन्छन् भने पिठ्यूँ फर्काएर भाग्नुको आज्ञा छैन । एक हदीसमा छ (أجتَنِبُوا السَّبعَ المُوبِقاتِ) "सात विनाशकारीबाट बच ।" यी सात मध्ये एउटा (والتَّوَلِّي يَومَ الزَّحفِ) "लडाईंका दिन पिठ्यूँ फर्काउनु हो ।" (सहीह बुख़ारी संख्या २७६६ किताबुल वसाया र मुस्लिम किताबुल ईमान)

[2]पछिल्लो आयतमा पिठ्यूँ फर्काउनुबाट जुन मनाही गरिएको छ दुई अवस्थाहरू यसबाट बिलग छन् । एउटा (تحرّف) को, अर्को (تحيّز) को । (تحرّف) को अर्थ हो एकातिर फर्किनु । "अर्थात् युद्धमा यौधिक योजना अनुसार अथवा शत्रुलाई धोकामा पार्नुको विचारले लड्दा-लड्दै एकातिर फर्किओस्, जसबाट शत्रुले यो ठानोस् कि त्यो पराजित भई भागिराखेको छ, परन्तु फेरि एक क्षणमा चाल बदलेर एक्कासि शत्रुमाथि आक्रमण गरिदेओस् । यो पिठ्यूँ देखाउनु होइन, बरू यो यौद्धिक योजना हो, जुन कैयन् पटक आवश्यक तथा लाभकारी हुन्छ ।" (تحيّز) का अर्थ हो मिल्नु तथा शरण लिनु । कुनै सैनिक लड्दा-लड्दा एक्लो हुन्छ भने त्यो कुनै प्रयोजनले युद्धको मैदानमा एकातिर लागोस् ताकि त्यसले आफ्नो गुटको शरण प्राप्त गर्न सकोस् तथा त्यसको सहायताले पुनः आक्रमण गरोस् । यी दुबै अवस्थाहरू उचित छन् । तथा धार्मिक रूपले मान्य छन् ।

[3]अर्थात् उपरोक्त दुबै दशा बाहेक यदि कुनै सैनिक समर भूमिबाट मुख फर्काउनेछ भने त्यसको लागि यो कठोर चेतावनी दिइएको छ ।

فَلَمْ تَقْتُلُوْهُمْ وَ لٰكِنَّ اللّٰهَ قَتَلَهُمْ ۪ وَمَا رَمَيْتَ اِذْ رَمَيْتَ وَلٰكِنَّ اللّٰهَ رَمٰى ۚ وَلِيُبْلِيَ الْمُؤْمِنِيْنَ مِنْهُ بَلَآءً حَسَنًا ۚ اِنَّ اللّٰهَ سَمِيْعٌ عَلِيْمٌ ﴿۱۷﴾

(१७) त तिमीले उनलाई वध गरेनौं, परन्तु अल्लाह तआलाले उनलाई वध गऱ्यो ।[1] तथा तपाईंले उनीतिर (माटो र ढुङ्गा) हान्नु भएन, परन्तु अल्लाहले हान्यो[2] ताकि मुसलमानहरूलाई आफूतिरबाट उनको प्रयासको अत्याधिक फल प्रदान गरोस्[3] । निःसन्देह अल्लाह तआला अत्याधिक सुन्ने, अत्याधिक जान्ने छ ।

ذٰلِكُمْ وَاَنَّ اللّٰهَ مُوْهِنُ كَيْدِ الْكٰفِرِيْنَ ﴿۱۸﴾

(१८) (एउटा कुरा त) यो भयो (दोस्रो कुरा यो हो) कि अल्लाह तआलाले काफ़िरहरूका योजनाहरूलाई विफल पार्नु थियो ।[4]

---

[1]अर्थात् बद्रको युद्धको यो सारा विवरण तिम्रो समक्ष प्रस्तुत गरिएको छ तथा जुन-जुन प्रकारले अल्लाहले तिम्रो सहायता गरेको छ, त्यसको स्पष्टीकरणका पश्चात तिमी यो नठान्नु कि काफ़िरहरूको वध, यो तिम्रो उपलब्धि हो । होइन, बरू यो अल्लाहकै सहायताको परिणाम हो, जसकारण तिमीलाई यो शक्ति प्राप्त भयो । यसकारण वास्तवमा उनलाई वध गर्नेवाला अल्लाह तआला हो ।

[2]बद्रको युद्धमा नबी सल्लल्लाहु अलैहि वसल्लमले स-साना ढुङ्गाहरूलाई मुट्ठीमा लिएर काफ़िरहरूतिर फ्याँक्नु भएको थियो, जसलाई एक त अल्लाह तआलाले काफ़िरहरूका मुख तथा आँखासम्म पुऱ्याइदियो । दोस्रो त्यसमा यो गुण उत्पन्न गरिदियो कि जसको कारण उनका आँखाका अगाडि अँध्यारो छायो तथा उनीहरूलाई केही पनि देखिदैनथ्यो, यो चमत्कार पनि जुन त्यसबेला अल्लाहको सहायताले प्रकट भयो, मुसलमानहरूको सफलतामा धेरै सहायक सिद्ध भयो । अल्लाह तआला भनिराखेको छ कि हे पैगम्बर ! ढुङ्गाहरू निःसन्देह तिमीले फ्याँकेको थियौ परन्तु त्यसमा गुण हामीले उत्पन्न गरेका थियौं, यदि हामीले यसमा यो गुण उत्पन्न नगरेको भए यी ढुङ्गाहरूले के गर्न सक्थे ? यसकारण वास्तवमा यो पनि हाम्रै काम थियो, न कि तपाईंको ।

[3](بلاء) (बलाअन) यहाँ उपकारको अर्थमा प्रयोग भएको छ । अर्थात् अल्लाहको यो समर्थन र कृपा अल्लाहको उपकार हो, जुन निष्ठावानहरूमाथि भयो ।

[4]दोस्रो उद्देश्य यसको काफ़िरहरूका योजनाहरूलाई निर्बल पार्नु तथा उनको शक्ति एवं गर्वलाई भाँच्नु थियो ।

إِن تَسْتَفْتِحُوا فَقَدْ جَآءَكُمُ الْفَتْحُ وَإِن تَنتَهُوا فَهُوَ خَيْرٌ لَّكُمْ وَإِن تَعُودُوا نَعُدْ وَلَن تُغْنِيَ عَنكُمْ فِئَتُكُمْ شَيْئًا وَلَوْ كَثُرَتْ وَأَنَّ اللَّهَ مَعَ الْمُؤْمِنِينَ ﴿١٩﴾

(१९) यदि तिमीहरू निर्णय चाहन्छौ भने त्यो निर्णय तिम्रो समक्ष आइसकेको छ ।[1] तथा यदि रोकिन्छौ भने यो तिम्रो लागि अति श्रेष्ठ छ, तथा यदि तिमी फेरि त्यही काम गर्नेछौ भने हामीले पनि त्यही काम गर्नेछौं, तथा तिम्रो समुदाय तिम्रो अलिकति पनि काम आउने छैन चाहे अधिक संख्या किन नहोस् । तथा वास्तविक कुरो यो हो कि अल्लाह तआला निष्ठावानहरूसँग छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا أَطِيعُوا اللَّهَ وَرَسُولَهُ وَلَا تَوَلَّوْا عَنْهُ وَأَنتُمْ تَسْمَعُونَ ﴿٢٠﴾

(२०) हे ईमान भएका ! अल्लाहको तथा त्यसका रसूल (सन्देशवाहक) को आदेशको पालना गर तथा त्यसबाट मुख नफर्काउ जबकि तिमी सुनिराखेका छौ ।

وَلَا تَكُونُوا كَالَّذِينَ قَالُوا سَمِعْنَا وَهُمْ لَا يَسْمَعُونَ ﴿٢١﴾

(२१) तथा तिमी उनीहरू समान नहुनु, जो दाबी त गर्दछन् कि हामीले सुन्यौं जबकि उनीहरू केही सुन्दैनन् ।[2]

[1]अबूजहल आदि कुरैशको सेनाको नेतृत्व गर्नेहरूले मक्काबाट निस्कँदाखेरि यो प्रार्थना गरेका थिए, "हे अल्लाह ! हामीमध्ये जो तिम्रो अधिक अवज्ञाकारी तथा सम्बन्ध विच्छेदक छ, भोलि तिमी त्यसलाई नष्ट गरिदेउ ।" आफ्नो विचारले उनीहरू मुसलमानहरूलाई अवज्ञाकारी ठान्दथे, यसकारण यसप्रकारको प्रार्थना गरे । अहिले जब अल्लाह तआलाले मुसलमानहरूलाई विजयको सौभाग्य प्रदान गऱ्यो त अल्लाह तआला काफ़िरहरूसित भनिराखेको छ कि तिमी विजय अर्थात् सत्य-असत्य बीच निर्णयको प्रार्थना गरिराखेका थियौ, त त्यो निर्णय अगाडि आइसकेको छ, यसकारण अब तिमी अधर्मको मार्ग छाडिदेउ, किनकि त्यो तिम्रो लागि लाभकारी छ, तथा यदि पुनः मुलमानहरूसित सामना गर्न आउँछौ भने हामी पनि पुनः उनको सहायता गर्नेछौं तथा तिम्रो समूह संख्यामा अधिक भएपनि तिम्रो काम आउनेछैन ।

[2]अर्थात् सुनिसके उपरान्त त्यस अनुसार कर्म नगर्नु यो काफ़िरहरूको तरीका हो, तिमी यस नीतिबाट बच । आउँदो आयतमै यस्ता मानिसहरूलाई मूक (लाटो), बहिरो, अज्ञानी तथा दूराचारी भनिएको छ । (دَوَابّ) बहुवचन हो (دَابَّة) को, जो धर्तीमा हिंड्ने-डुल्ने प्राणी हुन्

(२२) नि:सन्देह अल्लाहका निकट निकृष्ट प्राणी ती बहिरा-लाटा मानिसहरू हुन् जो बुद्धिले काम लिदैनन् ।[1]

إِنَّ شَرَّ الدَّوَابِّ عِندَ اللَّهِ الصُّمُّ الْبُكْمُ الَّذِينَ لَا يَعْقِلُونَ ﴿٢٢﴾

(२३) तथा यदि अल्लाह (तआला) उनीहरूमा कुनै गुण देख्थ्यो भने उनलाई अवश्य सुन्ने शक्ति प्रदान गर्थ्यो ।[2] तथा यदि उनीहरूलाई अब सुन्ने शक्ति दिन्छ, भने तैपनि उनीहरू मुख फर्काउने छन्, बिमुख हुँदै ।[3]

وَلَوْ عَلِمَ اللَّهُ فِيهِمْ خَيْرًا لَّأَسْمَعَهُمْ وَلَوْ أَسْمَعَهُمْ لَتَوَلَّوا وَّهُم مُّعْرِضُونَ ﴿٢٣﴾

(२४) हे निष्ठावानहरू ! तिमी अल्लाह तथा रसूलहरूको आदेशको पालना गर, जब रसूल तिमीलाई तिम्रो जीवनप्रद विषयतिर

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اسْتَجِيبُوا لِلَّهِ وَلِلرَّسُولِ إِذَا دَعَاكُمْ لِمَا يُحْيِيكُمْ ۖ وَاعْلَمُوا أَنَّ اللَّهَ

तिनी (دَابَّةٌ) हुन् । तात्पर्य प्राणी वर्ग हो अर्थात् यी सबैभन्दा नराम्रा हुन् जो सत्यको विषयमा बहिरा, मूक तथा अज्ञानी छन् ।

[1]यस कुरालाई कुर्आन करीममा अन्य स्थानमा यसप्रकार वर्णन गरिएको छ ।

﴿لَهُمْ قُلُوبٌ لَّا يَفْقَهُونَ بِهَا وَلَهُمْ أَعْيُنٌ لَّا يُبْصِرُونَ بِهَا وَلَهُمْ آذَانٌ لَّا يَسْمَعُونَ بِهَا، أُولَٰئِكَ كَالْأَنْعَامِ بَلْ هُمْ أَضَلُّ أُولَٰئِكَ هُمُ الْغَافِلُونَ﴾

"उनका हृदय छन्, तर त्यसबाट बुझ्दैनन्, उनका आँखा छन्, परन्तु त्यसबाट देख्दैनन् तथा उनका कान छन् परन्तु त्यसबाट सुन्दैनन्, यिनीहरू चौपाया समान छन्, बरू उनीहरूभन्दा पनि अधिक विचलित भएका यिनीहरू (अल्लाहबाट) अन्जान छन् ।" (सूर: अल-आराफ-१७९)

[2]अर्थात् उनीहरूको सुन्ने शक्ति लाभकारी बनाएर उनीहरूलाई ठीक बुद्धि प्रदान गदर्थ्यो, जसबाट उनीहरू सत्यलाई स्वीकार गर्थे तथा त्यसलाई अपनाउँथे परन्तु उनीहरूमा भलाई अर्थात सत्यको खोज छैन, यसकारण उनी ठीक बुद्धिबाट पनि बञ्चित छन् ।

[3]पहिला सुन्नुबाट तात्पर्य लाभकारी सुन्नु हो । यस दोस्रो सुन्नुबाट प्राकृतिक रूपले सुन्नुको शक्ति हो । अर्थात यदि अल्लाह तआला उनीहरूलाई सत्य कुरा सुनाइ पनि दिएको भने उनको हृदयमा सत्य जान्नुको खोजी नै न भएका कारण उनीहरू निरन्तर यसबाट बिमुख भइराखेका छन् ।

يَحُولُ بَيْنَ الْمَرْءِ وَقَلْبِهِ وَأَنَّهُ إِلَيْهِ تُحْشَرُونَ ﴿٢٤﴾

बोलाइराखेका हुन्छन्,[१] तथा याद राख कि अल्लाह मनुष्यको तथा त्यसको हृदय बीच (छेक) बन्दछ ।[२] तथा निःसन्देह तिमीलाई अल्लाहकै पासमा एकत्रित हुनुछ ।

وَاتَّقُوا فِتْنَةً لَا تُصِيبَنَّ الَّذِينَ ظَلَمُوا مِنكُمْ خَاصَّةً

(२५) तथा तिमी यस्ता आपदाबाट बच जुन विशेषरूपले उनीहरूमाथि नै घटित हुनेछैन ।

---

[१](لما يحييكم) यस्ता कुराहरूतिर जसबाट तिमीलाई जीवन प्राप्त होस् । ज्ञाताहरूले यसबाट धर्मयुद्धको भाव लिएका छन् कि यसमा तिम्रो जीवन साधन छ । केहीले कुरआनका आदेश, परिकलन तथा धार्मिक नियम भाव निकालेका छन् जसमा धर्म युद्ध पनि आउँछ अर्थ यो कि मात्र अल्लाह तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्मको आज्ञा पालन गर, तथा त्यस अनुसार काम गर, यसमा तिम्रो जीवन छ ।

[२]अर्थात् मृत्यु दिएर जसको स्वाद प्रत्येक जीवधारीले चाख्नुछ । यसको अर्थ यो हो कि यसभन्दा पूर्व कि तिमीलाई मृत्यु आओस् अल्लाह तथा रसूल सल्लल्लाहु अलैहि वसल्लमका कुरा मान तथा त्यसको अनुसार कर्म गर । केही विद्वानहरूले भनेका छन् कि अल्लाह तआला मनुष्यको हृदयसित जुनप्रकार निकट छ, यसमा त्यसलाई तुलनात्मक रूपले वर्णन गरिएको छ । तथा अर्थ यो हो कि त्यो हृदयहरूका रहस्य जान्दछ, त्यसबाट कुनै कुरो लुकेको छैन । इमाम इब्ने जरीर ले यसको भावार्थ यसो वर्णित गरेका छन् कि त्यो आफ्ना भक्तहरूका हृदयमा पूर्णरूपले प्रभाव राख्दछ तथा जब चाहन्छ उनका तथा उनका हृदयमध्य उभिदिन्छ । यहाँसम्मकि मनुष्य उसको इच्छा बिना कुनै पनि कुरोलाई प्राप्त गर्न सक्दैन । केही ज्ञाताहरूले बद्रको युद्धसित सम्बन्धित भनेका छन् कि मुसलमान शत्रुहरूको संख्याको कारण भयभीत थिए, तब अल्लाह तआलाले उनीहरूका हृदयमध्य उभेर उनको भयलाई शान्तिमा बदलिदियो । इमाम शौकानी भन्दछन् कि आयतका यी सबै भावार्थ हुन सक्दछन् । (फ़तहुल क़दीर) इमाम इब्ने जरीरको कथनको पुष्टि ती हदीसहरूबाट हुन्छ जसमा धर्मको मार्गमा दृढताले रहनुको प्रार्थना गर्नमा जोड दिइएको छ । जस्तो एक हदीसमा रसूलुल्लाह सल्लल्लाहु अलैहि बसल्लमले भन्नुभयो, "आदमका सन्तानका हृदय, एक हृदयको जस्तो कृपालुको दुई औंला बीच छ उनलाई जुन प्रकारले चाहन्छ परिवर्तन गरिरहन्छ ।" अनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यो प्रार्थना गर्नुभयो कि (اللّهمّ مُصَرِّفَ القُلُوبِ ، صَرِّفْ قُلُوبَنَا إِلَى طَاعَتِكَ) "हे हृदयका परिवर्तन गर्ने ! हाम्रा हृदयलाई आफ्नो आज्ञा पालनतिर फर्काइदेउ ।" (सहीह मुस्लिम किताबुल क़दर बाबु तसरीफ़िल्लाहे तआला अल कुलूब कैफ़ शाआअ) केही कथनहरूमा ( ثَبِّتْ قلبي على دينك ) छ । (तिर्मिजी अबवाबुल क़द्र)

وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ﴿٢٥﴾

जो तिमीमध्ये ती पापहरूका दोषी छन् ।[1] तथा यो जानिराख कि अल्लाह तआला दण्डमा कठोर छ ।

وَاذْكُرُوْٓا اِذْ اَنْتُمْ قَلِيْلٌ مُّسْتَضْعَفُوْنَ فِى الْاَرْضِ تَخَافُوْنَ اَنْ يَّتَخَطَّفَكُمُ النَّاسُ فَاٰوٰىكُمْ وَاَيَّدَكُمْ بِنَصْرِهٖ وَرَزَقَكُمْ مِّنَ الطَّيِّبٰتِ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٢٦﴾

(२६) तथा त्यस अवस्थालाई स्मरण गर, जबकि तिमी धर्तीमा थोरै थियौ, निर्बल मानिन्थ्यौ । यस भयमा रहन्थ्यो कि तिमीलाई मानिसहरूले लूटपाट र अपहरण नगरुन्, तब अल्लाहले तिमीलाई निवासको लागि स्थान दियो तथा तिमीलाई आफ्नो सहायताले शक्ति प्रदान गर्‍यो तथा तिमीलाई स्वच्छ खाद्य प्रदान गर्‍यो, ताकि तिमी कृतज्ञता प्रकट गर ।[2]

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَخُوْنُوا اللّٰهَ وَالرَّسُوْلَ وَتَخُوْنُوْٓا اَمٰنٰتِكُمْ وَاَنْتُمْ تَعْلَمُوْنَ ﴿٢٧﴾

(२७) हे ईमानवालाहरू ! तिमी अल्लाह तथा रसूल (को अधिकार) लाई हनन नगर तथा आफ्ना सुरक्षित वस्तुहरूमा विश्वासघात नगर ।[3] तथा तिमी जान्दछौ ।

---

[1]यसबाट तात्पर्य या त भक्तहरूको एक-अर्कामाथि अधिकार हो, जो बिना कुनै अधिकार सामान्य तथा विशेषको छुटको अत्याचार गर्दछन् अथवा तिनी सामान्य प्रकोप हुन, जुन वर्षाको अधिकता, अथवा बाढी आदि धर्ती तथा आकाशका विपदाको रूपमा घटित हुन्छन् तथा पुण्य तथा पाप दुबैलाई गर्नेहरू समानरूपले प्रभावित हुन्छन् । अथवा केही हदीसहरूमा पुण्यका कामहरूको आदेश दिनु तथा पापका कर्महरूबाट रोक्नलाई छाड़िदिनाले जुन प्रकोपको चेतावनीको वर्णन गरिएको छ, त्यो तात्पर्य हो ।

[2]यसबाट मक्की जीवनका कठिनाईहरू तथा भयको वर्णन तथा त्यस उपरान्त मदीनाको जीवनमा सुख-शान्ति तथा समृद्धि जुन अल्लाहको कृपाले प्राप्त भयो, त्यसको वर्णन हो ।

[3]अल्लाह तआला तथा रसूल सल्लल्लाहु अलैहि वसल्लमका अधिकारहरूमा विश्वासघातको तात्पर्य यो हो कि प्रत्यक्ष रूपले त अल्लाह तथा रसूल सल्लल्लाहु अलैहि वसल्लमका आज्ञाकारी बनेर रहन्छन्, एकान्तमा त्यसको विपरीत कार्य गर्छन् । विश्वासघात यो पनि हो कि कुनै अनिवार्य कामलाई छोडेर निषेधित काम गरियोस् । तथा ﴿وَتَخُوْنُوْٓا اَمٰنٰتِكُمْ﴾ को अर्थ यो हो कि एक व्यक्ति अर्को व्यक्तिको पासमा कुनै वस्तु सुरक्षाको विचारले राख्न लगाओस्, त्यसमा विश्वासघात नगरोस् । नबी सल्लल्लाहु अलैहि वसल्लमबाट पनि अमानत (नासो) को

وَاعْلَمُوٓا اَنَّمَآ اَمْوَالُكُمْ وَاَوْلَادُكُمْ فِتْنَةٌ ۙ وَّاَنَّ اللّٰهَ عِنْدَهٗٓ اَجْرٌ عَظِيْمٌ ﴿٢٨﴾

(२८) तथा तिमी यस कुरालाई पनि जानिराख कि तिम्रा धन तथा तिम्रा सन्तान एउटा परीक्षाका लागि हुन् ।[1] (तथा यस कुरालाई पनि जानिराख) कि अल्लाह तआ़लासित बहुत ठूलो प्रत्युपकार छ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِنْ تَتَّقُوا اللّٰهَ يَجْعَلْ لَّكُمْ فُرْقَانًا وَّيُكَفِّرْ عَنْكُمْ سَيِّاٰتِكُمْ وَيَغْفِرْ لَكُمْ ۗ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ﴿٢٩﴾

(२९) हे ईमान भएका ! यदि तिमी अल्लाहसित तर्सिरहनेछौ भने अल्लाह (तआ़ला) ले तिमीलाई एक निर्णयको कुरा प्रदान गर्नेछ । तथा तिमीबाट तिम्रा पापलाई हटाइदिनेछ र तिमीलाई क्षमा गरिदिनेछ तथा अल्लाह (तआ़ला) महाकृपालु छ ।[2]

सुरक्षामाथि जोड दिइएको छ । हदीसहरूमा छ कि नबी सल्लल्लाहु अलैहि वसल्लम आफ्ना अधिकतर भाषणहरूमा अवश्य भन्नुहुन्थ्यो

لا إيمان لِمَنْ لا أمانَةَ لَهُ ، وَلا دِيْنَ لِمَنْ لا عَهْدَ لَهُ

"त्यसको ईमान छैन जसबाट अमानत सुरक्षित छैन, तथा त्यसको धर्म छैन, जसलाई वचन पूरा गर्नुको दृढताको आभास छैन ।" (मुसनद अहमद भाग ३, पृष्ठ १३९ तथा हदीसका विशेषज्ञ अलबानीले भनेका छन् कि "यो स्वच्छ हदीस हो ।"

[1]धन एवं सन्तानको प्रेम नै कुनै व्यक्तिलाई सामान्यरूपले विश्वासघात गर्नुमा तथा अल्लाह एवं रसूल सल्लल्लाहु अलैहि वसल्लमको आज्ञा भङ्ग गर्नुमा विवश गर्दछ । यसकारण यिनलाई आपत्ति (परीक्षा) भनिएको छ अर्थात् यसद्वारा मनुष्यको परीक्षा लिइन्छ कि उनका प्रेमका साथ विश्वास तथा आज्ञापालनको माँगलाई पूरा गर्दछ अथवा गर्दैन ? यदि त्यो पूरा गर्दछ भने बुझ्नुस् त्यो आफ्नो परीक्षामा सफल भयो । त्यसको अर्को रूप अर्थात् विपरीतमा असफल । यस अवस्थामा यो धन तथा सन्तान उसका लागि अल्लाहको यातना भोग्नुका कारण बन्नेछन् ।

[2]अल्लाहको भय (तक़्वा) को अर्थ यो हो कि अल्लाहका आदेशहरूको अवहेलना तथा निषेधित कार्यहरूबाट बच्नु । तथा फुरक़ानका कैयन् अर्थ वर्णन गरिएका छन् । जस्तो यस्ता वस्तु जसबाट सत्य तथा असत्यको मध्ये भेद गर्न सकियोस् अर्थात् यो हो कि अल्लाहको भय (तक़्वा) को कारण हृदय दृढ, दूर दृष्टि तथा सत्यको मार्ग प्रशस्त हुन्छ जसको कारण मनुष्य प्रत्येक यस्तो अवसरमा, जब जन सामान्य शंका तथा सन्देहमा भौंतारिरहेको हुन्छ, त्यसलाई सोझो मार्गको सौभाग्य प्राप्त हुन्छ । यसका

(३०) तथा त्यस घटनाको पनि वर्णन गर्नुस्, जबकि काफ़िरहरू तपाईंको विषयमा षड्यन्त्र गरिराखेका थिए कि तपाईंलाई बन्दी बनाऊन् अथवा तपाईंको हत्या गरून् अथवा तपाईंलाई देशबाट निष्कासित गरिदेऊन्।[1] तथा उनीहरू आफ्ना षड्यन्त्र रचिराखेका थिए र अल्लाह तआ़ला आफ्ना योजना बनाइराखेको थियो तथा अल्लाह तआ़ला सर्वोत्तम नियोजक छ।[2]

وَإِذْ يَمْكُرُ بِكَ الَّذِينَ كَفَرُوا لِيُثْبِتُوكَ أَوْ يَقْتُلُوكَ أَوْ يُخْرِجُوكَ ۚ وَيَمْكُرُونَ وَيَمْكُرُ اللَّهُ ۖ وَاللَّهُ خَيْرُ الْمَاكِرِينَ ﴿٣٠﴾

(३१) तथा जब उनीहरूका समक्ष हाम्रा आयतहरू पढिन्छन् तब भन्छन् कि हामीले सुन्यौं, यदि हामी चाहन्छौं भने हामी पनि यसको समान कुरा भन्न सक्छौं, यो त केही पनि होइन मात्र पूर्वजहरूका कल्पित कथाहरू हुन्।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا قَالُوا قَدْ سَمِعْنَا لَوْ نَشَاءُ لَقُلْنَا مِثْلَ هَٰذَا ۙ إِنْ هَٰذَا إِلَّا أَسَاطِيرُ الْأَوَّلِينَ ﴿٣١﴾

अतिरिक्त विजय, कृपा, मोक्ष तथा मुक्ति पनि यसका अर्थ भनिएका छन् तथा सबै अर्थहरूको तात्पर्य हुनसक्छ किनभने तक़्वाबाट अवश्य यी सबै लाभ प्राप्त हुनसक्छन्। बरू यसका साथ पापहरूबाट छुटकारा, अन्तिम मोक्ष तथा महान कृपा प्राप्त हुन्छ।

[1]यो त्यस षड्यन्त्रको वर्णन हो, जुन मक्काका मूर्तिपूजक नेताहरूले एक रात्रि दारूल नदवामा तैयार गरेका थिए। अन्तमा यो निर्धारित गरियो कि प्रत्येक जातिका युवाहरूलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमको हत्या गर्नको लागि नियुक्त गरियोस्, ताकि कुनै एकको हत्याको बदलामा हत्या गर्न नसकियोस् बरू धन दिएर मुक्त हुन सकोस्।

[2]अतः यस षड्यन्त्रको पूर्तिका लागि मूर्ति पूजारी युवकहरू उहाँ सल्लल्लाहु अलैहि वसल्लमको घरको बाहिर एक रात्रि यस प्रतीक्षामा उभिरहे कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम घरबाट बाहिर निस्कुन अनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमको हत्या गरौं। अल्लाह तआ़लाले उहाँ सल्लल्लाहु अलैहि बसल्लमलाई यस षड्यन्त्रको सूचना दियो तथा उहाँ सल्लल्लाहु अलैहि बसल्लमले घरबाट बाहिर निस्कँदाखेरि एक मुट्ठी माटो लिनु भयो तथा उनका टाउकामा हाल्दै जानुभयो, कसैले नबी सल्लल्लाहु अलैहि बसल्लम निस्केको थाहा पनि पाएन्, यहाँसम्मकि उहाँ सल्लल्लाहु अलैहि वसल्लम सुरक्षित सौर नामक गुफामा पुग्नुभयो। यो काफ़िरहरूको लागि अल्लाहको योजना थियो जसभन्दा राम्रो योजना कसैले बनाउन सक्दैनन्। (मकरको अर्थको लागि हेर्नुस् सूरः आले-इमरानको आयत संख्या-५४ को व्याख्या)

وَإِذْ قَالُوا اللَّهُمَّ إِنْ كَانَ هَٰذَا هُوَ الْحَقَّ مِنْ عِنْدِكَ فَأَمْطِرْ عَلَيْنَا حِجَارَةً مِنَ السَّمَاءِ أَوِ ائْتِنَا بِعَذَابٍ أَلِيمٍ ﴿٣٢﴾

(३२) तथा जब उनीहरूले भने, हे अल्लाह ! यदि यो कुर्‌आन वास्तवमा तिम्रो तर्फबाट सत्य हो भने हामीमाथि आकाशबाट ढुङ्गा बर्साउ, अथवा हामीमाथि कुनै कष्टदायक प्रकोप घटित गर ।

وَمَا كَانَ اللَّهُ لِيُعَذِّبَهُمْ وَأَنْتَ فِيهِمْ ۚ وَمَا كَانَ اللَّهُ مُعَذِّبَهُمْ وَهُمْ يَسْتَغْفِرُونَ ﴿٣٣﴾

(३३) तथा अल्लाह (तआ़ला) ले यस्तो गर्नेछैन कि तपाईं उनीहरू बीच उपस्थित हुँदा उनीहरूलाई यातना दिइयोस् । तथा अल्लाह (तआ़ला) ले उनीहरूलाई यातना दिनेछैन[1] जबकि उनीहरू क्षमा-याचना गरिराखेका हुन्छन् ।[2]

وَمَا لَهُمْ أَلَّا يُعَذِّبَهُمُ اللَّهُ وَهُمْ يَصُدُّونَ عَنِ الْمَسْجِدِ الْحَرَامِ وَمَا كَانُوا أَوْلِيَاءَهُ ۚ إِنْ أَوْلِيَاؤُهُ إِلَّا الْمُتَّقُونَ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٣٤﴾

(३४) तथा उनीहरूमा के कुरो छ कि उनलाई अल्लाह (तआ़ला) ले दण्ड नदेओस् यद्यपि कि उनी मानिसहरूलाई मस्जिदे हरामबाट रोक्दछन् जबकि उनीहरू यस मस्जिदका संरक्षक होइनन्, त्यसको संरक्षक अल्लाहका आज्ञा पालकहरू बाहेक कोही छैन, परन्तु उनीहरूमध्ये अधिकतर जान्दैनन् ।[3]

[1]अर्थात् ईशदूतहरूका उपस्थितिमा समुदायहरूमाथि प्रकोप हुँदैन, यसकारण उहाँ सल्लल्लाहु अलैहि वसल्लमको उपस्थिति पनि उनीहरू सुरक्षा एवं शान्तिले रहनुको कारण थियो ।

[2]यसबाट तात्पर्य हो कि उनीहरू भविष्यमा मुसलमान भएर क्षमा-याचना गर्नेछन् अथवा परिक्रमा गर्दाखेरि मूर्तिपूजक (غُفْرَانَكَ رَبَّنَا ! غُفْرَانَكَ) भन्ने गर्थे (हाम्रो पालनकर्ता हामीलाई क्षमा गरिदेउ)

[3]अर्थात् ती मूर्तिपूजक आफूलाई मस्जिदे हराम (खानये क़ाअबा) को संरक्षक ठान्दथे, यसको कारण जसलाई चाहन्थे परिक्रमाको आज्ञा दिन्थे जसलाई चाहन्थे दिँदैनथे । अत: उनीहरू मुसलमानहरूलाई पनि मस्जिदे हराममा आउनबाट रोक्दथे जबकि वास्तविकता यो थियो कि उनीहरू संरक्षक थिएनन् । (تحكّما) अन्यायपूर्वक बनेका थिए, अल्लाह तआ़लाको हूकुम भयो, त्यसका संरक्षक त अल्लाहसित भय राख्ने व्यक्ति नै बन्न सक्दछन्, न कि मूर्तिपूजक ।

وَمَا كَانَ صَلَاتُهُمْ عِنْدَ الْبَيْتِ إِلَّا مُكَاءً وَتَصْدِيَةً ۚ فَذُوقُوا الْعَذَابَ بِمَا كُنْتُمْ تَكْفُرُونَ ﴿٣٥﴾

(३५) तथा उनीहरूको नमाज़ काअ़बाका निकट मात्र यही थियो, सिटी बजाउनु तथा ताली बजाउनु[1] तसर्थ आफ्नो कुफ़्रको कारण यस यातनाको स्वाद चाख ।

إِنَّ الَّذِينَ كَفَرُوا يُنْفِقُونَ أَمْوَالَهُمْ لِيَصُدُّوا عَنْ سَبِيلِ اللَّهِ ۚ فَسَيُنْفِقُونَهَا ثُمَّ تَكُونُ عَلَيْهِمْ حَسْرَةً ثُمَّ يُغْلَبُونَ ۗ وَالَّذِينَ كَفَرُوا إِلَىٰ جَهَنَّمَ يُحْشَرُونَ ﴿٣٦﴾

(३६) निःसन्देह यी विश्वासहीन मानिसहरू आफ्ना धन यसकारण व्यय गरिराखेका छन् कि अल्लाहको मार्गबाट रोकुन्, तथा यिनीहरू आफ्ना धन व्यय गरिराख्ने छन्, अनि ती धन उनको लागि पश्चातापको कारण बनेर रहनेछन्, अनि पराजित हुनेछन्। तथा काफ़िरहरू नरक़तिर एकत्रित गरिनेछन् ।[2]

यस आयतमा जुन यातनाको वर्णन छ, त्यसको तात्पर्य मक्का विजय हो, जुन मक्काका मूर्तिपूजकहरूका लागि एउटा कठोर यातनाको स्थिति राख्दछ। यसभन्दा पूर्वको आयतमा जुन यातनालाई मनाही गरिएको छ, जुन पैग़म्बरहरूको उपस्थिति अथवा क्षमा-याचना गर्दै रहनुको कारण आउँदैन, त्यसबाट तात्पर्य नष्ट-भ्रष्ट गर्ने प्रकोप तथा सम्पूर्ण विनाश हो। शिक्षा दिनको लागि तथा चेतावनीका निम्ति स-साना प्रकोप यसमा सम्मिलित छैनन् ।

[1]मूर्तिपूजक जुनप्रकार अल्लाहको घर (ख़ानये काअ़बा) को परिक्रमा नाङ्गो भएर गर्दथे, त्यसैप्रकार परिक्रमा गर्दाखेरि मुखमा औंलाहरू हाली सिटी तथा ताली बजाउँदथे। यसलाई पनि यिनीहरू आराधना र पुण्यको कार्य ठान्दथे। जुन प्रकारल आजपनि अशिक्षित सूफीहरू मस्जिद तथा आस्तानाहरूमा नाच्दछन् तथा ढोल आदि बजाउँछन्। उनीहरू भन्दछन् यही हाम्रो नमाज़ तथा आराधना हो। नाची-नाची हामीले आफ्नो यार (अल्लाह) लाई मनाइहाल्नेछौं نعوذ بالله من هذه الخرافات

[2]जब बद्रमा मक्काका कुरैशको पराजय भयो तथा उनका पराजित मानिसहरू त्यहाँ पुगे। यता अबू सुफ़ियान पनि आफ्नो व्यापारिक क़ाफ़िला लिएर पुगिसकेका थिए, त केही मानिसहरू जसका पिता र पुत्र अथवा भाई यस युद्धमा मारिएका थिए, अबू-सुफ़ियान तथा जसका त्यस व्यापारिक काफ़िलाहरूमा भागीदारी थियो, उनीहरूको पासमा गए र प्रार्थना गरे कि यस मालको प्रयोग मुसलमानहरूका विरूद्ध गरून्। मुसलमानहरूले हामीलाई अत्याधिक हानि पुऱ्याएका छन्, यसकारण उनीहरूसित बदला लिनका लागि युद्ध गर्नु आवश्यक छ। अल्लाह तआ़लाले यस आयतमा यसैप्रकारका मानिसहरू अथवा यसैप्रकारका कार्य गर्नेहरूको

لِيَمِيزَ اللَّهُ الْخَبِيثَ مِنَ الطَّيِّبِ وَيَجْعَلَ الْخَبِيثَ بَعْضَهُ عَلَىٰ بَعْضٍ فَيَرْكُمَهُ جَمِيعًا فَيَجْعَلَهُ فِي جَهَنَّمَ ۚ أُولَٰئِكَ هُمُ الْخَاسِرُونَ ﴿٣٧﴾

(३७) यसकारण कि अल्लाह (तआला) ले अपवित्रहरूलाई पवित्रहरूबाट अलग गरोस्।[1] तथा अपवित्रहरूलाई एक-अर्कासित राखेर ती सबैलाई एकत्रित गरोस्, त्यसपश्चात ती सबैलाई नरकमा हालोस्। यस्ता मानिसहरू पूर्णरूपले हानिमा छन्।

قُل لِّلَّذِينَ كَفَرُوا إِن يَنتَهُوا يُغْفَرْ لَهُم مَّا قَدْ سَلَفَ وَإِن يَعُودُوا

(३८) (तपाईं) अविश्वासीहरूसित भनिदिनुस् कि यदि यिनीहरू रोकिन्छन् भने यिनका सारा पाप जुन पहिला गरिसकेका छन्, क्षमा गरिनेछन्।[2]

विषयमा भन्नुभएको छ कि निःसन्देह यिनीहरू अल्लाहको मार्गबाट मानिसहरूलाई रोक्नको निम्ति माल व्यय गर्दछन्, परन्तु उनीहरूको भाग्यमा केवल पश्चाताप तथा पराजयको अतिरिक्त केही पनि आउने छैन तथा परलोकमा उनीहरूको वासस्थान नरक हुनेछ।

[1]यो अलगाव आख़िरतमा हुनेछ जबकि आज्ञाकारीहरूलाई अवज्ञाकारीहरूबाट अलग गरी जस्तो कि आदेश छ,

﴿وَامْتَازُوا الْيَوْمَ أَيُّهَا الْمُجْرِمُونَ﴾

"हे अपराधीहरू ! आज अलग्ग होऊ।" (सूरः यासीन-५९)

अर्थात् पुण्य आत्माहरूलाई अलग्ग पारिनेछ तथा अपराधी एवं मिश्रणवादी तथा अवज्ञाकारिहरूलाई एकत्रित गरी सबैलाई नरकमा हालिनेछ। अथवा यसको सम्बन्ध संसारसँग छ। अक्षर "लाम" को प्रयोग सम्बन्ध भन्नेलाई हो। अर्थात् काफ़िर अल्लाहको मार्गबाट रोक्नुको लागि जुन धन व्यय गरिराखेका छन्, हामी उनीहरूलाई यस्तो गर्न अवसर प्रदान गर्नेछौं, ताकि यसद्वारा अल्लाह तआला अपवित्रलाई पवित्रबाट काफ़िरहरूलाई ईमानवालाहरूबाट एवं स्वार्थीहरूलाई निःस्वार्थीहरूबाट अलग्ग गरोस्। यस आधारमा आयतको अनुवाद हुनेछ। काफ़िरहरूद्वारा हामीले तिम्रो परीक्षा लिनेछौं, उनी तिमीसित लड्‌ने छन् तथा हामी उनलाई उनको माल पनि लडाईंमा व्यय गर्नु शक्ति दिनेछौं ताकि अपवित्र, पवित्रबाट विलग होऊन् अनि ती काफ़िरहरूलाई एक आपसमा मिलाइदिनेछौं अर्थात् सबैलाई एकत्रित गरिदिनेछौं। (इब्ने कसीर)

[2]रोकिनुको अर्थ मुसलमान हुनु हो जुनप्रकार हदीसमा पनि छ, "जसले इस्लाम धर्म स्वीकार गरेर पुण्यको मार्ग अपनायो, त्यसबाट त्यसका पापहरूको सोधपुछ हुनेछैन, जुन उसले अज्ञानकालमा गरेको होला तथा जसले इस्लाम धर्म स्वीकार गरेपनि नराम्रो कुरा छोडेन, त्यससित पूर्व तथा पश्चात सबै कर्महरूको हिसाब हुनेछ। (सहीह बुख़ारी)

فَقَدْ مَضَتْ سُنَّتُ الْأَوَّلِينَ ﴿٣٨﴾

तथा यदि आफ्नो त्यही रीति राख्नेछन् भने पूर्वका (विश्वासहीनहरूका) लागि अपनाइएको नियम लागू भइसकेको छ ।[1]

وَقَاتِلُوهُمْ حَتَّىٰ لَا تَكُونَ فِتْنَةٌ وَيَكُونَ الدِّينُ كُلُّهُ لِلَّهِ ۚ فَإِنِ انتَهَوْا فَإِنَّ اللَّهَ بِمَا يَعْمَلُونَ بَصِيرٌ ﴿٣٩﴾

(३९) तथा तिमी उनीसित त्यस बेलासम्म संघर्ष गर जबकि उनको आस्थामा बिगाड (फित्ना) रहँदैन[2] तथा धर्म पूर्णरुपमा अल्लाहकै हुन जाओस् ।[3] अनि यदि उनी रोकिन्छन्, भने अल्लाह (तआला) उनका कर्महरूलाई राम्ररी देख्दछ ।[4]

وَإِن تَوَلَّوْا فَاعْلَمُوا أَنَّ اللَّهَ مَوْلَاكُمْ ۚ نِعْمَ الْمَوْلَىٰ وَنِعْمَ النَّصِيرُ ﴿٤٠﴾

(४०) तथा यदि मुख फर्काउँछन्,[5] विश्वास गर कि अल्लाह (तआला) तिम्रो मित्र छ ।[6] त्यो उत्तम मित्र तथा उत्तम सहायक हो ।[7]

---

बाब इस्तेताबतिल मूर्तद्दीन र मुस्लिम किताबुल ईमान बाब हल यूआख़ज बे आमालि अल-जाहिलीया:) एक अन्य हदीसमा छ ।

(الإسلام يَجُبُّ ما قَبْلَهُ)

"इस्लाम पूर्वका पापहरूलाई मेटाइदिन्छ ।" (मुसलद अहमद भाग-४, पृष्ठ-१९९)

[1]अर्थात् यदि उनीहरू आफ्ना अविश्वास एवं द्वेषमा अडिग रहन्छन् भने चाँडो अथवा ढिलो यातनाहरूका भागी बनेर नै रहनेछन् ।

[2]फित्नासित तात्पर्य शिर्क (मिश्रणबाद) हो अर्थात् त्यसबेलासम्म धर्मयुद्ध जारीराख जबसम्म मिश्रणवाद समाप्त हुँदैन ।

[3]अर्थात् एकेश्वरवाद (तौहीद) को ध्वजा पूर्ण विश्वमा फहरन्छ ।

[4]अर्थात् तिम्रो लागि उनको ऊपरी इस्लाम नै पूरा छ । अन्त: कारणको विषय अल्लाहलाई समर्पित गरिदेउ किनभने उसलाई प्रत्यक्ष एवं परोक्ष सबैको ज्ञान छ ।

[5]अर्थात् इस्लाम स्वीकार गर्दैनन् तथा अविश्वास तथा तिम्रो विरोधमा अडिग रहन्छन् ।

[6]अर्थात् तिम्रा शत्रुहरूमाथि तिम्रो सहायक समर्थक एवं संरक्षक छ ।

[7]अत: सफल पनि त्यही हुनेछ जसको स्वामी (रक्षक) अल्लाह छ तथा प्रभावी पनि त्यही हुनेछ, जसको सहायक त्यही छ ।

وَاعْلَمُوْٓا اَنَّمَا غَنِمْتُمْ مِّنْ شَيْءٍ فَاَنَّ لِلّٰهِ خُمُسَهٗ وَلِلرَّسُوْلِ وَلِذِي الْقُرْبٰى وَالْيَتٰمٰى وَالْمَسٰكِيْنِ وَابْنِ السَّبِيْلِ ۙ اِنْ كُنْتُمْ اٰمَنْتُمْ بِاللّٰهِ وَمَآ اَنْزَلْنَا عَلٰى عَبْدِنَا

(४१) तथा जानिराख कि तिमी जुन प्रकारको जे पनि युद्धको धन[1] तथा (परिहार) प्राप्त गर्दछौ त्यसमध्ये पाँचौ भाग त अल्लाह एवं ईशदूत तथा समीपवर्ती एवं अनाथ तथा निर्धन एवं यात्रीहरूको लागि हो,[2] यदि तिमीले अल्लाहप्रति ईमान राखेका छौ र उसप्रति जुन

[1]ग़नीमत (परिहार) सित तात्पर्य त्यो धन हो जुन संग्राममा काफ़िरहरूलाई पराजित गरी प्राप्त गरिन्छ। पूर्व समुदायमा यो रीति थियो कि लडाईंको समाप्ति पश्चात परिहारलाई एकत्रित गरिन्थ्यो तथा आकाशबाट अग्नि आएर त्यसलाई जलाएर भष्म गरिदिन्थ्यो किन्तु मुसलमानहरूका लागि परिहार वैधानिक बनाइयो तथा जुन धन बिना लडाईं, सन्धि अथवा करद्वारा प्राप्त हुन्छ, त्यसलाई "फैय" भनिन्छ, कहिलेकाही ग़नीमतलाई पनि "फैय" भनिन्छ। ( مِن شَيْءٍ ) सित अभिप्राय हो जे-जति छ अर्थात् थोरै अथवा धेरै मूल्यवान अथवा साधारण सबैलाई एकत्रित गरी नियमानुसार वितरण गरिनेछ। कुनै सैनिकलाई वितरणभन्दा पूर्व आफ्नो पासमा राख्ने अनुमति छैन।

[2]अल्लाह शब्द मात्र शुभको लागि अथवा यसकारण हो कि प्रत्येक वस्तुको वास्तविक मालिक त त्यही नै छ तथा आदेश पनि उसैको चल्छ। तात्पर्य अल्लाह तथा रसूलका भागबाट एउटै नै हो, अर्थात् सम्पूर्ण माललाई पाँच भागमा विभाजित गरी चार भाग त ती विजयी सैनिकहरूलाई बाँडिनेछ, जसले युद्धमा भाग लिएका हुन्। त्यसमा पनि पैदललाई एक भाग तथा सवारलाई तीन गुना भाग प्राप्त हुनेछ। पाँचौं भाग जसलाई अरबी भाषामा खुम्स भन्दछन्। त्यसको बारेमा यो भनाईं छ कि यसको पुनः पाँच भाग गरिनेछ। एक भाग रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई (तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको पश्चात सार्वजनिक सेवामा व्यय गरिनेछ) जस्तो कि स्वयं उहाँ सल्लल्लाहु अलैहि वसल्लमले पनि यो भाग मुसलमानहरूका लागि नै व्यय गर्नुहुन्थ्यो, बरू उहाँ सल्लल्लाहु अलैहि वसल्लमले पनि भन्नुभयो

(وَالْخُمُسُ مَرْدُوْدٌ عَلَيْكُمْ)

"अर्थात् मेरो जुन पाँचौ भाग छ, त्यो पनि मुसलमानहरूको समस्या समाधानमा व्यय हुन्छ।" सुनन नसाई, यस हदीसलाई अलबानीले सहीह नसाईमा प्रमाणित मान्नु भएको छ, अल-निसाई ३८५८, तथा मुसनद अहमद भाग-५, पृष्ठ-३१९)

दोस्रो भाग रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका निकटतम सम्बन्धिहरूलाई अनि अनाथ, निर्धन तथा यात्रीहरूलाई। भनिन्छ कि यो खुम्स आवश्यकता अनुसार व्यय गरिनेछ।

يَوْمَ الْفُرْقَانِ يَوْمَ الْتَقَى الْجَمْعٰنِ ۗ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٤١﴾

हामीले आफ्ना भक्तहरूमाथि त्यसदिन अवतरित गरेका छौं, जुन सत्य-असत्यका[1] बीच विभाजनको[2] थियो, जुन दिन दुबै सेनाहरूमा भिडन्त मुटभेड भएको थियो[3] तथा अल्लाह प्रत्येक वस्तुमाथि शर्वशक्तिमान छ।

اِذْ اَنْتُمْ بِالْعُدْوَةِ الدُّنْيَا وَهُمْ بِالْعُدْوَةِ الْقُصْوٰى وَالرَّكْبُ اَسْفَلَ مِنْكُمْ ۗ وَلَوْ تَوَاعَدْتُّمْ لَاخْتَلَفْتُمْ فِي الْمِيْعٰدِ ۙ وَلٰكِنْ

(४२) जबकि तिमी समीपका किनारमा तथा उनीहरू टाढाका छोरमा थिए,[4] तथा यात्रीगण तिमीबाट (धेरै) तलतिर थिए,[5] यदि तिमी परस्पर वचन दिएको भए त निर्धारित समयमा पुगनमा विभेद गर्ने थियौ,[6] तर अल्लाहले एउटा काम गर्नु नै थियो

[1]यस अवतरणबाट तात्पर्य फरिश्ताहरूको तथा अल्लाहका आयतहरू (चमत्कारहरू आदि) को अवतरण जुन बद्रको युद्धमा भयो।

[2]बद्रको युद्ध १७ रमज़ानुल मुबारक २ हिज़रीमा भयो । त्यस दिनलाई यौमुल फुरक़ान यसकारण भनिएको छ कि यो काफ़िर तथा मुसलमानहरूका बीच प्रथम युद्ध थियो तथा मुसलमानहरूलाई विजय तथा प्रभाव प्रदान गरेर यो सिद्ध गरिदियो कि इस्लाम सत्य छ तथा कुफ्र एवं शिर्क (बहुदेववाद) असत्य छ ।

[3]अर्थात मुसलमान तथा काफ़िरहरूका सेनाहरू ।

[4]दुनिया शब्द अरबी भाषाको (دُنُوٌّ) बाट लिएको हो । यो निकट कि अर्थमा लिइएको छ । तात्पर्य छ त्यो किनारा (छोर) जुन मदीना नगरनिर थियो जतातिर मुसलमान थिए । (قُصوى) कुस्वा टाढालाई भन्दछन् काफ़िरहरू त्यस किनारमा थिए जुन मदीना नगरबाट टाढा थियो ।

[5]यसबाट तात्पर्य त्यो व्यापारिक काफ़िला (समूह) थियो जुन आदरणीय अबु सुफ़ियानको नेतृत्वमा सीरियाबाट फिर्ता भई मक्कातिर गइराखेको थियो तथा जसलाई प्राप्त गर्नको लागि नै वास्तवमा मुसलमान यतातिर आएका थिए। यो पर्वतबाट धेरै टाढा पश्चिमतिर घाटीमा थियो, जबकि बद्र जहाँ युद्ध भयो त्यो उचाईमा थियो ।

[6]अर्थात् यदि युद्धको लागि योजनानुसार दिन-तिथिको एक-अर्कासित वचन वद्धता भए अथवा घोषणा भए, सम्भव थियो कि कुनै पनि पक्ष बिना युद्धको पराजय स्वीकार गरिहाल्थे, परन्तु यो युद्ध हुनु अल्लाहले लेखि निर्धारित गरेको थियो, यसैले यस्ता कारण उत्पन्न गरिए कि बिना कुनै घोषणा गरी दुबै पक्ष आमुन्ने-सामुन्ने एक-अर्काका विरूद्ध पंक्तिबद्ध भए ।

لِيَقْضِيَ اللَّهُ أَمْرًا كَانَ مَفْعُولًا لِيَهْلِكَ مَنْ هَلَكَ عَنْ بَيِّنَةٍ وَيَحْيَىٰ مَنْ حَيَّ عَنْ بَيِّنَةٍ ۗ وَإِنَّ اللَّهَ لَسَمِيعٌ عَلِيمٌ ﴿٤٢﴾

जुन निर्धारित भइसकेको थियो ताकि जुन नाश होस् त्यो तर्कमा (अर्थात निश्चय जानेर) नाश होस् एवं जो जीवित रहोस् त्यो पनि तर्कमा (सत्य पहिचान गरी) जीवित रहोस् तथा अल्लाह राम्ररी सुन्दछ, जान्दछ ।[1]

إِذْ يُرِيكَهُمُ اللَّهُ فِي مَنَامِكَ قَلِيلًا ۖ وَلَوْ أَرَاكَهُمْ كَثِيرًا لَّفَشِلْتُمْ وَلَتَنَازَعْتُمْ فِي الْأَمْرِ وَلَٰكِنَّ اللَّهَ سَلَّمَ ۗ إِنَّهُ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ﴿٤٣﴾

(४३) जबकि तिमीलाई तिम्रा सपनामा अल्लाहले उनको संख्या कम देखायो, यदि उनको अधिकता देखाएको भए तिमी काँतर बन्न पुग्थ्यौ तथा यस विषयमा परस्पर मतभेद गर्दथ्यौ किन्तु अल्लाहले बचायो, निश्चय त्यो अन्तर्यामी छ ।

وَإِذْ يُرِيكُمُوهُمْ إِذِ الْتَقَيْتُمْ فِي أَعْيُنِكُمْ قَلِيلًا وَيُقَلِّلُكُمْ فِي أَعْيُنِهِمْ لِيَقْضِيَ اللَّهُ أَمْرًا

(४४) तथा जब कि उसले भेट्ने समयमा उनीहरूलाई तिम्रो दृष्टिमा साह्रै कम देखायो तथा तिमीलाई उनीहरूका दृष्टिमा कम देखायो ।[3]

[1]यो कारण हो अल्लाहका त्यस भाग्य लेखको जसको आधारमा बद्रमा दुबै पक्ष एकत्रित भए । ताकि जो ईमानमा जीवित रहन्छ त्यो यस प्रमाणका साथ जीवित रहोस् तथा उसलाई दृढ विश्वास रहोस् कि इस्लाम सत्य छ किनभने सत्यतालाई त्यसले बद्रमा देखिसकेको छ, तथा जो अधर्मको अवस्थामा मर्छ त त्यो पनि यस प्रमाणका साथ मरोस् कि उसको मार्ग विचलित थियो किनभने यो स्पष्ट भइसक्यो ।

[2]अल्लाह तआलाले नबी सल्लल्लाहु अलैहि वसल्लमलाई स्वप्नमा मूर्तिपूजकहरूको संख्या कम देखायो तथा त्यही संख्या उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सहाबाका सामु वर्णन गरिदिनुभयो, जसबाट उनको साहस झन बढेर आयो । यदि यसको विपरीत काफ़िरहरूको संख्या अधिक देखाएको भए सहाबाका हृदयमा काँतरता उत्पन्न हुन्थ्यो तथा आपसी मतभेद हुने सम्भावना थियो । परन्तु अल्लाहले यी दुबै परिस्थितिहरूबाट मुसलमानहरूलाई बचायो ।

[3]ताकि ती काफ़िर पनि तिमीबाट भयभीत भई पछाडि नहटुन् । प्रथम घटना स्वप्नको थियो तथा यो देखाउनु ठीक युद्ध आरम्भ हुनुभन्दा पूर्व भयो, जस्तो कि कुर्आनका शब्दहरूबाट स्पष्ट हुन्छ । तैपनि यो घटना युद्ध प्रारम्भ हुनुभन्दा पूर्वको हो । परन्तु जब युद्ध प्रारम्भ भयो त काफ़िरहरुलाई मुसलमान

كَانَ مَفْعُوْلًا ۭ وَاِلَى اللّٰهِ تُرْجَعُ الْاُمُوْرُ ۝

ताकि अल्लाह (तआ़ला) त्यस कामलाई अन्त्यसम्म पुऱ्याओस्, जुन गर्नु नै थियो ।[1] तथा सबै विषय अल्लाहतिर नै फर्काइन्छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِذَا لَقِيْتُمْ فِئَةً فَاثْبُتُوْا وَاذْكُرُوا اللّٰهَ كَثِيْرًا لَّعَلَّكُمْ تُفْلِحُوْنَ ۝

(४५) हे मोमिनहरू ! जब तिमी कुनै (विरोधी) सेनासित युद्धरत हुन्छौ, तब अडिग रह तथा अल्लाहलाई अत्याधिक स्मरण गर, ताकि तिमीलाई सफलता प्राप्त होस् ।[2]

وَاَطِيْعُوا اللّٰهَ وَرَسُوْلَهٗ وَلَا تَنَازَعُوْا فَتَفْشَلُوْا وَتَذْهَبَ رِيْحُكُمْ وَاصْبِرُوْا ۭ

(४६) तथा अल्लाहको एवं त्यसका रसूलको आज्ञा पालना गरिराख, आपसमा मतभेद नगर । अन्यथा काँतर हुनेछौ तथा तिम्रो हावा शक्ति खुस्केर जान्छ तथा धैर्य र

आफूभन्दा दुईगुना देखिन थालेका थिए । जस्तो कि सूरः आले इमरानको आयत संख्या-१३ बाट ज्ञात हुन्छ कि बद्रमा अधिक देखाउनको तात्पर्य यो थियो कि मुसलमानहरूको अधिक संख्या देखेर काफिरहरूका हृदयमा मुसलमानहरूको भय उत्पन्न होस्, जसका कारण उनमा कायरता उत्पन्न होस् । यसको विपरीत प्रारम्भमा कमसंख्या देखाउनुको उद्देश्य यो थियो कि उनीहरू युद्धबाट विमुख न होऊन् ।

[1]यो सबैको उद्देश्य यही थियो कि अल्लाह तआ़लाले जुन निर्णय गरिदिएको थियो, त्यो पूर्ण होस्, यसकारण त्यसले यसका कारण उत्पन्न गरिदियो ।

[2]अब मुसलमानहरूलाई युद्धका ती नियम भनिंदैछ, जुन शत्रुसित युद्ध गर्दाखेरि ध्यानमा राख्नु आवश्यक छ। सर्वप्रथम कुरो दृढता एवं विश्वास राख्नु हो किनभने यसबिना युद्धको मैदानमा दृढ रहनु सम्भव छैन, तथापि यसबाट पुन: आक्रमण गर्नको लागि अथवा आफ्नो सेनामा मिल्नको लागि पिठ्यूँ देखाउनु बेग्लै कुरा हो किनभने कहिलेकाहीं पुन: आक्रमण गर्नको लागि पनि पछि हट्नु अनिवार्य हुन्छ, जसको वर्णन यसभन्दा पूर्व गरिसकिएको छ। दोस्रो निर्देश यो हो कि अल्लाहलाई अधिकताले स्मरण गर ताकि यदि मुसलमान थोरै छन् तैपनि अधिक स्मरण गर्नाले अल्लाह पनि उनीतिर आकर्षित रहोस् तथा मुसलमान अधिक छन् भने अधिक स्मरण गर्नुको कारण मुसलमानहरूमा गर्व तथा घमण्ड उत्पन्न नहोस् । बरु वास्तविक ध्यान अल्लाहको सहायतामा नै रहोस् ।

إِنَّ ٱللَّهَ مَعَ ٱلصَّٰبِرِينَ ۝٤٦

विश्वास दृढ राख, नि:सन्देह अल्लाह तआला सहनशील, धैर्यवानहरूसित छ ।[1]

وَلَا تَكُونُوا۟ كَٱلَّذِينَ خَرَجُوا۟ مِن دِيَٰرِهِم بَطَرًا وَرِئَآءَ ٱلنَّاسِ وَيَصُدُّونَ عَن سَبِيلِ ٱللَّهِ ۚ وَٱللَّهُ بِمَا يَعْمَلُونَ مُحِيطٌ ۝٤٧

(४७) तथा उनीहरूजस्तो नहोउ जो गर्व गर्दै, र मानिसहरूमा अभिमान गर्दै आफ्ना घरहरूबाट हिंडे तथा अल्लाहको मार्गबाट रोक्दथे ।[2] जे-जति उनीहरू गरिराखेका छन्, अल्लाह त्यसलाई आफ्नो घेरामा लिएको छ ।

وَإِذْ زَيَّنَ لَهُمُ ٱلشَّيْطَٰنُ أَعْمَٰلَهُمْ وَقَالَ لَا غَالِبَ لَكُمُ ٱلْيَوْمَ مِنَ ٱلنَّاسِ وَإِنِّى جَارٌ لَّكُمْ ۖ فَلَمَّا تَرَآءَتِ ٱلْفِئَتَانِ نَكَصَ عَلَىٰ عَقِبَيْهِ

(४८) तथा (स्मरण गर) जबकि उनका कर्महरूलाई शैतानले उनीहरूलाई सुशोभित देखाइराखेको थियो तथा भनिराखेको थियो कि मानिसहरूमध्ये कोही पनि आज तिमीमाथि प्रभावशाली हुनसक्दैन । म स्वयं तिम्रो समर्थक हूँ, परन्तु जब दुबै समूह प्रकट भए त

[1]तेस्रो निर्देश अल्लाह तथा त्यसको रसूलको आज्ञा पालन हो । स्पष्ट कुरो छ कि यस कठोर स्थितिमा अल्लाह तथा त्यसको रसूलको अवहेलना कति भयानक हुनसक्छ । तसर्थ एक मुसलमानलाई प्रत्येक समय अल्लाह तथा त्यसको रसूलको आज्ञा पालन आवश्यक छ । तैपनि रणक्षेत्रमा यसको विशेषता झन् बढेर जान्छ । तथा यस अवसरमा अलिकति पनि अवज्ञा अल्लाहको सहायताबाट बञ्चित गर्नसक्छ । चौथो कुरो आपसमा मतभेद एवं संघर्ष नगर, यसबाट तिमी कायर बन्नेछौ तथा हावा खुस्केर जान्छ अर्थात् तिम्रो शक्ति क्षीण भएर जान्छ । तथा पाँचौं निर्देश– धैर्य राख । अर्थात् युद्धमा जति कठिन परिस्थिति आएपनि तथा युद्धमा तीब्रता आएपनि धैर्य नछाड । नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि एउटा हदीसमा भन्नुभयो,

"मानिसहरू ! शत्रुसित मुढभेडको (भिडन्त) कामना नगर तथा अल्लाहसित शान्तिको कामना गर । तैपनि यदि शत्रुसित सामना गर्नुको अवसर आउँछ भने धैर्य राख (अर्थात् दृढताले युद्ध गर) तथा जानिहाल कि स्वर्ग तलवारको छायाँमुनि छ ।" (सहीह बुख़ारी किताबुल जिहाद) अध्याय जब ईशदूत अपरान्ह लडाईं आरम्भ गर्नुहुन्थ्यो त सन्ध्यासम्म लडाईंमा विलम्ब गर्नु हुँदैनथ्यो ।

[2]मक्काका मिश्रणवादी जब आफ्ना यात्रीगणको सुरक्षा तथा युद्धको इच्छाले निस्के, त बडो गर्व तथा घमण्डले निस्के, मुसलमानहरूलाई यसप्रकारका काफ़िरहरूका कर्मबाट रोकियो ।

وَقَالَ إِنِّي بَرِيءٌ مِّنكُمْ إِنِّي أَرَىٰ مَا لَا تَرَوْنَ إِنِّي أَخَافُ اللَّهَ ۚ وَاللَّهُ شَدِيدُ الْعِقَابِ ﴿٤٨﴾

पछाडी फर्किहाल्यो तथा भन्यो कि म त तिमीहरूबाट अलग्ग छु । म त्यो देखिराखेको छु जुन तिमी देखिराखेका छैनौं ।[१] म अल्लाहसित तर्सन्छु ।[२] तथा अल्लाह (तआला) कठोर यातना दिनेछ ।[३]

إِذْ يَقُولُ الْمُنَافِقُونَ وَالَّذِينَ فِي قُلُوبِهِم مَّرَضٌ غَرَّ هَٰؤُلَاءِ دِينُهُمْ ۗ وَمَن يَتَوَكَّلْ عَلَى اللَّهِ

(४९) जबकि मुनाफिक् (द्वयवादी) तथा उनीहरू जसका हृदयमा रोग थियो[४] भनिराखेका थिए कि उनीहरूलाई त उनको धर्मले धोकामा पारिदिएको छ ।[५] र जो मानिस पनि अल्लाहमा भरोसा गर्दछ, त

[१]मूर्तिपूजक जब मक्काबाट निस्के त उनीहरूलाई आफ्ना विरोधी कबीला (समुदाय) बनी किनानसित यो भय थियो कि उनीहरूले पछाडीबाट उनीहरूलाई हानि न पुऱ्याउन् । अतः शैतान, सुराका बिन मालिकको रूपमा आयो, जुन बनी बक्र बिन किनानका मुख्य मान्छे थिए, तथा उनले न केवल विजयको भविष्यवाणी गरे बरु आफ्नो पूर्ण समर्थनको विश्वास दिलाए । परन्तु जब फरिश्ताहरूलाई उसले देख्यो त उसलाई अल्लाहको सहायता दृष्टिगोचर भयो, अनि पिठ्यूँ फर्काइ भागिहाल्यो ।

[२]अल्लाहको भय त उसका हृदयमा के हुनु थियो ? परन्तु उसलाई पूर्ण विश्वास भइहालेको थियो कि अल्लाहको विशेष सहायता मुसलमानहरूको साथमा छ । मूर्तिपूजकहरू उनका सम्मुख टिक्न सक्ने छैनन् ।

[३]सम्भव छ कि यो शैतानको कथनको भाग होस् तथा यो पनि सम्भव छ कि यो अल्लाह तआलाको तर्फबाट वाक्यको पुनरावृत्ति होस् ।

[४]यसबाट तात्पर्य या त ती मुसलमान हुन्, जो भर्खरै मुसलमान भएका थिए तथा मुसलमानहरूको सफलतामा उनीहरूलाई शंका थियो, अथवा यसबाट तात्पर्य मूर्तिपूजक हुन् तथा यो पनि सम्भव छ कि मदीनाका निवासी यहूदी तात्पर्य होस् ।

[५]अर्थात् उनको संख्या त हेर तथा संसाधनको जुन दशा छ, त्यो पनि स्पष्ट छ । परन्तु उनीहरू मुकाबिला (भिडन्त) गर्न आएका छन् मक्काका मूर्तिपूजकहरूसित, जो संख्यामा अधिक छन् तथा हरेक प्रकारका अस्त्र-शस्त्र तथा साधनले परिपूर्ण छन् । लाग्दछ कि उनको धर्मले उनलाई धोकामा पारिदिएको छ । तथा यो सामान्य कुरा पनि उनको बुद्धिमा आइराखेको छैन ।

فَإِنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ﴿٤٩﴾

अल्लाह तआ़ला नि:सन्देह प्रभावशाली तथा विज्ञाता छ ।[1]

وَلَوْ تَرَىٰ إِذْ يَتَوَفَّى الَّذِينَ كَفَرُوا الْمَلَائِكَةُ يَضْرِبُونَ وُجُوهَهُمْ وَأَدْبَارَهُمْ وَذُوقُوا عَذَابَ الْحَرِيقِ ﴿٥٠﴾

(५०) तथा काश ! तिमीले त्यस बेलाको अवस्था हेर्ने भए जबकि फरिश्ताहरू विश्वासहीनहरूका प्राण निकाल्दछन्, र उनका मुख तथा कम्मरमा हान्दछन् (तथा भन्दछन्) तिमी पोलिने यातनाको स्वाद चाख ।[2]

ذَٰلِكَ بِمَا قَدَّمَتْ أَيْدِيكُمْ وَأَنَّ اللَّهَ لَيْسَ بِظَلَّامٍ لِّلْعَبِيدِ ﴿٥١﴾

(५१) यो त ती कर्महरूको कारण हो जुन तिम्रा हातहरूले अघिनै पठाएका छन्,नि:सन्देह अल्लाह (तआ़ला) आफ्ना भक्तहरूमाथि अलिकति पनि अत्याचार गर्दैन ।[3]

---

[1]अल्लाह तआ़लाको आदेश छ, "भौतिकवादीहरूलाई ती ईमानवालाहरूको साहस तथा विश्वासको के अनुमान हुनसक्दछ जसको पूर्ण आस्था अल्लाहमा छ, जो प्रभावशाली पनि छ अर्थात् आफ्ना आश्रितहरूलाई अल्लाह असहाय छोड्दैन तथा विज्ञाता छ त्यसको प्रत्येक कर्ममा कूटनीति हुन्छ, जसको बोध मनुष्यको बुद्धिले गर्न सक्दैन ।"

[2]केही व्याख्याकारहरूले यसलाई बद्रको युद्धमा मारिएका मूर्तिपूजकहरूको विषयमा भएको भनेका छन् । आदरणीय इब्ने अब्बास भन्नुहुन्छ कि जब मूर्तिपूजक मुसलमानहरूतिर आउँथे त मुसलमान उनका मुखमा तलवारले हान्थे, जसबाट बच्नको लागि उनीहरू पिठ्यूँ फर्काएर भाग्दथे, तब फरिश्ताहरू उनका पछाडीको भागमा तलवारले हान्दथे । परन्तु यो साधारण आयत हो जसले प्रत्येक काफ़िर तथा मूर्तिपूजकलाई सम्मिलित गरेको छ । तथा अर्थ यो हो कि मृत्युको समय फरिश्ताहरू उनका मुख तथा पिठ्यूँको उर्धव भागमा हान्दछन्, जुनप्रकार सूर: अल-अनआममा पनि आदेश गरिएको छ कि

﴿وَالْمَلَائِكَةُ بَاسِطُوا أَيْدِيهِمْ﴾

"फरिश्ताहरूले उनीहरूलाई हान्न हात अगाडी बढाउँछन् ।" (सूर: अल-अनआ़म-९३)

तर केही विद्वानहरूका निकट फरिश्ताहरूको यो प्रहार प्रलयका दिन नरकतिर लैजाँदाखेरि हुनेछ तथा नरकको अधिकारीले भन्नेछ कि अब "तिमी डाहको यातनाको स्वाद चाख ।"

[3]यो चोट तथा यातना तिम्रा कर्महरूको परिणाम स्वरूप हो, अन्यथा अल्लाह आफ्ना भक्तहरूमाथि अत्याचार तथा अन्याय गर्नेवाला होइन, बरु त्यो त न्यायकारी हरेक प्रकारको अत्याचार तथा अन्याबाट पवित्र छ ।

كَدَأْبِ آلِ فِرْعَوْنَ ۙ وَالَّذِينَ مِن قَبْلِهِمْ ۚ كَفَرُوا بِآيَاتِ اللَّهِ فَأَخَذَهُمُ اللَّهُ بِذُنُوبِهِمْ ۗ إِنَّ اللَّهَ قَوِيٌّ شَدِيدُ الْعِقَابِ ﴿٥٢﴾

(५२) फ़िरऔनका अनुयायीको दशाको समान तथा उनका पूर्वजहरूको,[1] कि उनीहरूले अल्लाहका आयतहरूप्रति अविश्वास गरे त अल्लाहले उनका पापहरूका कारण उनीहरूलाई समात्यो । अल्लाह (तआ़ला) नि:सन्देह शक्तिशाली तथा गम्भीर यातनावाला छ ।

ذَٰلِكَ بِأَنَّ اللَّهَ لَمْ يَكُ مُغَيِّرًا نِّعْمَةً أَنْعَمَهَا عَلَىٰ قَوْمٍ حَتَّىٰ يُغَيِّرُوا مَا بِأَنفُسِهِمْ ۙ وَأَنَّ اللَّهَ سَمِيعٌ عَلِيمٌ ﴿٥٣﴾

(५३) यो यसकारण कि अल्लाह (तआ़ला) यस्तो छैन कि कुनै समुदायमाथि कुनै कृपा गरेर पुन: त्यसलाई बदलिदेओस्, जबसम्मकि उनीहरू स्वयं आफ्ना त्यस स्थितिलाई परिवर्तित गर्दैनन्, जुनकि उनको आफ्नो थियो ।[2] तथा यो कि अल्लाह तआ़ला सर्वश्रोता, सर्वज्ञाता छ ।

हदीस कुद्सीमा पनि छ (हदीस कुद्सी त्यो हो जुन प्रकाशनाको भाग नहोस् परन्तु मुसलमानहरूको लागि आवश्यक होस्, त्यसलाई अल्लाह तआ़ला आदरणीय जिब्रीलद्वारा मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई भनेको हुन्छ) । अल्लाह तआ़ला भन्दछ :

"हे मेरा भक्तहरू ! मैले आफूमाथि अत्याचार निषेध गरेको छु तथा मैले त्यसलाई तिम्रा मध्य पनि निषेध गरेको छु । अत: तिमी एक-अर्कामाथि अत्याचार नगर । हे मेरा भक्तहरू ! यी तिम्रा नै कर्म हुन् जसको गणना मैले गरेको छु । अत: जसले आफ्ना कर्महरूमा भलाई पाउँछ त अल्लाहको महिमाको वर्णन गरोस् तथा जसले यसको विपरीत पाउँछ, त्यसले स्वयं आफूलाई नै नराम्रो भनोस् ।" (सहीह मुस्लिम किताबुल बिर्र बाब तहरीमुज़ जुल्म)

[1] (دأب) दाबको अर्थ हो आदत (व्यवहार) अक्षर क़ाफ उपमाको लागि हो । अर्थात् ती मूर्तिपूजकहरूको आदत अथवा अवस्था अथवा व्यवहार नै यस्तो थियो कि अल्लाहका पैग़म्बरहरूलाई झुठ्लाउँथे, त्यसैप्रकार फ़िरऔन तथा त्यसका पूर्व झूट बोल्नेहरूको बानी अथवा दशा थियो ।

[2] यसको अर्थ यो हो कि जबसम्म कुनै समुदाय कृतघ्नताको मार्ग अपनाएर तथा अल्लाह तआ़लाद्वारा निर्देशित निषेधहरूबाट विमुख भई आफ्ना दशा एवं व्यवहारहरूलाई परिवर्तित गर्दैन, अल्लाह तआ़ला त्यसमाथि आफ्ना सुख-सुविधाहरू एवं कृपाको द्वार बन्द गर्दैन । अन्य शब्दहरूमा अल्लाह तआ़ला पापहरूका कारण आफ्ना कृपाहरू समाप्त गरिदिन्छ । तथा अल्लाह तआ़लाका कृपाको

كَدَأْبِ اٰلِ فِرْعَوْنَ ۙ وَالَّذِيْنَ مِنْ قَبْلِهِمْ ؕ كَذَّبُوْا بِاٰيٰتِ رَبِّهِمْ فَاَهْلَكْنٰهُمْ بِذُنُوْبِهِمْ وَاَغْرَقْنَاۤ اٰلَ فِرْعَوْنَ ۚ وَكُلٌّ كَانُوْا ظٰلِمِيْنَ ﴿٥٤﴾

(५४) फ़िरऔनका वर्ग तथा उनीभन्दा पूर्वका मानिसहरुका समतुल्य जब कि उनीहरुले आफ्ना पोषकका कुराहरूलाई झुठ्लाए तब हामीले उनका पापहरूका कारण उनीहरूलाई ध्वस्त गरिदियौं र फ़िरऔनका अनुयायीहरूलाई डुबाइदियौं तथा यी सबै अत्याचारी थिए ।[1]

اِنَّ شَرَّ الدَّوَآبِّ عِنْدَ اللّٰهِ الَّذِيْنَ كَفَرُوْا فَهُمْ لَا يُؤْمِنُوْنَ ﴿٥٥﴾

(५५) निश्चय नै सबै जीवहरूभन्दा नराम्रा अल्लाहका निकट ती हुन् जसले कुफ्र गरे अनि उनीहरूले ईमान कायम गरेनन् ।[2]

اَلَّذِيْنَ عٰهَدْتَّ مِنْهُمْ ثُمَّ يَنْقُضُوْنَ عَهْدَهُمْ فِيْ كُلِّ مَرَّةٍ وَّهُمْ لَا يَتَّقُوْنَ ﴿٥٦﴾

(५६) जसबाट तपाईंले वचन लिनुभयो, तैपनि उनीहरू आफ्ना वचन हरेक पटक भङ्ग गरिदन्छन् तथा कदापि संयम गर्दैनन् ।[3]

पात्र हुनका लागि आवश्यक छ कि पापहरूबाट पन्छियोस् । अर्थात् परिवर्तनबाट तात्पर्य यो हो कि समुदाय पापहरूलाई त्याग गरी अल्लाहको आज्ञापालन गर्न थालोस् ।

[1]यहाँ यसै कुरामा पुनः जोड दिइएको छ, जुन अघि चर्चित भइसकेको छ । परन्तु यसमा विनाशको अवस्थाको वर्णन अधिक छ कि उनीहरूलाई डुबाइयो । यसका अतिरिक्त यो स्पष्ट गरियो कि अल्लाहले उनलाई डुबाएर अत्याचार गरेन, बरु यिनी स्वयं आफ्ना प्राणमाथि अत्याचार गरिराखेका थिए । अल्लाह त कसैमाथि अत्याचार गर्दैन । ﴿وَمَا رَبُّكَ بِظَلَّامٍ لِّلْعَبِيْدِ﴾ (सूरः हाम.मीम.सजदः ४६)

[2](شَرُّ النَّاس) (मानिसहरूमा सबैभन्दा नराम्रा) भन्नुको सट्टा (شَرُّ الدَّوابّ) भनिएको छ, जुन भाषाको आधारमा मनुष्य तथा चौपाया जीवहरू आदि सबैको लागि प्रयोग हुन्छ । तर सामान्यरूपले चौपायाहरूको लागि प्रयोग हुन्छ । अर्थात् काफ़िरहरूका सम्बन्ध मनुष्यहरूभन्दा होइन, कृतघ्नता गरेर पशु बरु पशुहरूभन्दा पनि नराम्रा बनिहाले ।

[3]यो काफ़िहरूको नै एउटा व्यवहारको वर्णन हो कि प्रत्येक पटक वचन भङ्ग गर्ने काम गर्दछन् तथा त्यसको परिणामसित अलिकति पनि भयभीत हुँदैनन् । केही मानिसहरूले यसबाट यहूदीहरूको वंश बनू कुरैजाको भावार्थ लिएका छन्, जोसित रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको यो सन्धि थियो कि उनीहरूले मूर्तिपूजकहरूको सहायता गर्ने छैन, परन्तु उनीहरूले यसको निर्वाह गरेनन् ।

فَإِمَّا تَثْقَفَنَّهُمْ فِي الْحَرْبِ فَشَرِّدْ بِهِم مَّنْ خَلْفَهُمْ لَعَلَّهُمْ يَذَّكَّرُونَ ۝

(५७) अत: जहिले पनि तिमी उनीहरूमाथि युद्धमा प्रभावी हुन्छौ त उनीहरूलाई यस्तो प्रहार गर कि पछाडि भएकाहरू पनि भागून् ।[1] संम्भवत: उनीहरूले शिक्षा प्राप्त गरिहालून् ।

وَإِمَّا تَخَافَنَّ مِن قَوْمٍ خِيَانَةً فَانبِذْ إِلَيْهِمْ عَلَىٰ سَوَاءٍ ۚ إِنَّ اللَّهَ لَا يُحِبُّ الْخَائِنِينَ ۝

(५८) तथा यदि तिमीलाई कुनै समुदायबाट विश्वासघातको भय छ भने समानताको अवस्थामा उनको सन्धि भङ्ग गरिदेउ ।[2] अल्लाहलाई विश्वासघातीहरू प्रिय छैनन् ।[3]

وَلَا يَحْسَبَنَّ الَّذِينَ كَفَرُوا سَبَقُوا ۚ إِنَّهُمْ لَا يُعْجِزُونَ ۝

(५९) तथा काफ़िरहरू यो नठानुन् कि उनीहरू उम्किहाले, नि:सन्देह उनीहरू विवश गर्न सक्दैनन् ।

[1](شَرِّدْ بِهِمْ) को अर्थ हो कि उनलाई यस्तो किसिमले प्रहार गर कि जसबाट उनका समर्थक तथा साथीहरूमा भागा-भागको अवस्था उत्पन्न होस्, यहाँसम्मकि उनीहरू तपाईंतिर यस सम्भावनाले मुख नफर्काउन कि कहीं उनको पनि त्यही परिणाम नहोस्, जुन उनका अग्रगामीहरूको भयो ।

[2]विश्वासघातसित तात्पर्य छ कि जुन समुदायसँग सन्धि भयो त्यसबाट यो भय छ कि त्यसले सन्धि भङ्ग गरिदिन्छ। तथा (على سواء) (समानताको अवस्थामा) को अर्थ हो कि उनीहरूलाई उचित रूपले सूचित गरिदेउ कि भविष्यमा हाम्रा बीच कुनै सन्धि छैन। ताकि दुबै पक्ष आ-आफ्नो सुरक्षाको स्वयं उत्तरदायी रहून्, कुनै एक पक्ष अज्ञान वश तथा धोकामा नमारियोस् ।

[3]अर्थात् यो सन्धि भङ्ग यदि मुसलमानहरूको तर्फबाट पनि हुन्छ भने तैपनि यो विश्वासघात हो, अर्थात् जसलाई अल्लाह तआला प्रेम गर्दैन। आदरणीय मुआविया (رضى الله عنه) तथा रूमिहरूका बीच सन्धि थियो। जब सन्धिको अवधि समाप्त हुन निकट आयो त आदरणीय मुआविया (رضى الله عنه) ले रूमको धर्तीको निकट आफ्ना सेनाहरू एकत्रित गर्न प्रारम्भ गर्नुभयो । उद्देश्य यो थियो कि सन्धिको अवधि समाप्त हुने बित्तिकै रूमिहरूमाथि आक्रमण गरियोस् । एउटा सहाबी अम्र बिन अबस:को ज्ञानमा आदरणीय मुआवियाका यी तयारीहरू आएपछि यसलाई विश्वासघात भन्नुभयो तथा ईशदूत (उनीमाथि परमेश्वरको दया एवं शान्ति होस्) को एक कथन प्रस्तुत गरी त्यसलाई सन्धि भङ्ग भन्नुभयो, जसपश्चात आदरणीय मुआविया (رضى الله عنه) ले आफ्ना सेनाहरूलाई फिर्ता बोलाउनु भयो । (मुसनद अहमद भाग-५ पृष्ठ १११ र अबू दाऊद किताबुल जिहाद)

وَأَعِدُّوا لَهُم مَّا اسْتَطَعْتُم مِّن قُوَّةٍ وَمِن رِّبَاطِ الْخَيْلِ تُرْهِبُونَ بِهِ عَدُوَّ اللَّهِ وَعَدُوَّكُمْ وَآخَرِينَ مِن دُونِهِمْ لَا تَعْلَمُونَهُمُ اللَّهُ يَعْلَمُهُمْ ۚ وَمَا تُنفِقُوا مِن شَيْءٍ فِي سَبِيلِ اللَّهِ يُوَفَّ إِلَيْكُمْ وَأَنتُمْ لَا تُظْلَمُونَ ﴿٦٠﴾

(६०) तथा उनीसित (लड्नका) लागि आफ्नो सामर्थ्य अनुसार शक्ति तयार गर तथा घोडाहरू पनि तयार राख,[1] ताकि त्यसबाट तिमी अल्लाहका शत्रुहरूलाई भयभीत गर्न सक तथा उनका अतिरिक्त अरुहरूलाई पनि, जसलाई तिमी जान्दैनौ, अल्लाह उनीहरूलाई राम्ररी जान्दछ, तथा जे-जति पनि अल्लाहको मार्गमा खर्च गर्नेछौ, त्यो तिमीलाई पूरा-पूरा दिइनेछ तथा तिम्रा अधिकारहरूको हनन गरिने छैन ।

وَإِن جَنَحُوا لِلسَّلْمِ فَاجْنَحْ لَهَا وَتَوَكَّلْ عَلَى اللَّهِ ۚ إِنَّهُ هُوَ السَّمِيعُ الْعَلِيمُ ﴿٦١﴾

(६१) तथा यदि उनीहरू सन्धितिर प्रवृत्त हुन्छन् भने तिमी पनि सन्धितिर लाग तथा अल्लाहमा भरोसा राख ।[2] निःसन्देह त्यो सर्वश्रोता, सर्वज्ञाता छ ।

---

[1](قوة) को व्याख्या नबी करीमको कथनानुसार बाण चलाउनु हो, (सहीह मुस्लिम किताबुल इमारः तथा अन्य हदीसका पुस्तकहरू) किनभने त्यसबेला यो निकै ठूलो युद्धको हथियार थियो तथा अत्यन्त महत्वपूर्ण शिक्षा पनि, जुन प्रकार घोडाहरू युद्धका लागि अति आवश्यक थिए, जस्तो कि यस आयतबाट पनि स्पष्ट हुन्छ तर अब तीर चलाउन तथा घोडाहरूको युद्धमा यति आवश्यकता तथा महत्व रहेन । यसकारण ﴿وَأَعِدُّوا لَهُم مَّا اسْتَطَعْتُم﴾ का अधीन आजकलका आधुनिक हथियार आउँछन् । (जस्तै मिज़ाईल, ट्याङ्क, बम तथा युद्धका विमान तथा पोत तथा युद्धका लागि पन्डुब्बी आदि) जसको तयारी आवश्यक छ ।

[2]अर्थात् यदि परिस्थितिहरू युद्धको अपेक्षा शान्तिका पक्षमा छन् तथा शत्रु पनि सन्धि गर्न चाहन्छ भने सन्धि गरिहाल्नु कुनै अनुचित होइन । यदि सन्धिबाट शत्रुको उद्देश्य छल तथा धोका दिनु हो भने पनि चिन्ताको आवश्यकता छैन, अल्लाहमा भरोसा राख, निःसन्देह अल्लाह शत्रुको छल तथा षड्यन्त्रबाट पनि सुरक्षित राख्नेछ, तथा त्यो तपाईंको लागि पर्याप्त छ । परन्तु सन्धिको यो आज्ञा त्यस परिस्थितिमा छ जब मुसलमानहरूको शक्ति क्षीण हुन्छ तथा सन्धिमा इस्लाम तथा मुसलमानहरूलाई लाभ हुन्छ परन्तु जब परिस्थिति यसको विपरीत हुन्छ, मुसलमान शक्ति तथा साधनमा श्रेष्ठ हुन्छन् तथा काफ़िरहरूको शक्ति क्षीण हुन्छ तथा अपमानित हुन्छ भने यस परिस्थितिमा सन्धिको साटो काफ़िरहरूको शान्ति तथा गर्वलाई तोड्नु आवश्यक छ । (सूरः मुहम्मद-३५ ﴿وَقَاتِلُوهُمْ حَتَّىٰ لَا تَكُونَ فِتْنَةٌ وَيَكُونَ الدِّينُ كُلُّهُ لِلَّهِ﴾ (सूरः अल-अंफाल-३९)

وَإِنْ يُرِيدُوٓا۟ أَن يَخْدَعُوكَ فَإِنَّ حَسْبَكَ ٱللَّهُ ۚ هُوَ ٱلَّذِىٓ أَيَّدَكَ بِنَصْرِهِۦ وَبِٱلْمُؤْمِنِينَ ﴿٦٢﴾

(६२) तथा यदि उनीहरू तिमीसित विश्वासघात गर्न चाहने छन् भने अल्लाह तिमीलाई पर्याप्त छ, त्यसैले आफ्नो सहायताले तथा निष्ठावानहरूबाट तिम्रो समर्थन गराएको छ ।

وَأَلَّفَ بَيْنَ قُلُوبِهِمْ ۚ لَوْ أَنفَقْتَ مَا فِى ٱلْأَرْضِ جَمِيعًا مَّآ أَلَّفْتَ بَيْنَ قُلُوبِهِمْ وَلَـٰكِنَّ ٱللَّهَ أَلَّفَ بَيْنَهُمْ ۚ إِنَّهُۥ عَزِيزٌ حَكِيمٌ ﴿٦٣﴾

(६३) तथा उनका हृदयमा परस्पर प्रेम पनि उसैले उत्पन्न गरेको छ। यदि तपाईंले धर्तीका सम्पूर्ण कुराहरू व्यय गरिदिएको भए पनि उनका हृदयमा प्रेमको भावना उत्पन्न गर्नसक्नु हुन्नथ्यो[1] परन्तु अल्लाहले नै उनका हृदयमा

[1]यी आयतहरूमा अल्लाह तआलाले नबी सल्लल्लाहु अलैहि वसल्लम तथा ईमानवालाहरूमाथि जुन उपकार गऱ्यो, उनीहरूमध्ये एउटा ठूलो उपकारको वर्णन गरेको छ । त्यो यो हो कि नबी सल्लल्लाहु अलैहि वसल्लमको ईमानवालाहरूद्वारा सहायता गरियो, उनीहरू उहाँ सल्लल्लाहु अलैहि वसल्लमका दाहिने हात तथा रक्षक एवं सहायक बने । ईमानवालाहरूमाथि यो उपकार गऱ्यो कि यसभन्दा पूर्व जुन उनीहरूमा शत्रुता थियो, त्यसलाई प्रेममा परिवर्तित गरिदियो । पहिला उनीहरू एक-अर्काको रगतका पिपासु थिए, परन्तु अब परस्पर मोहित भए । अघि उनीहरूमा हार्दिक शत्रुता थियो, परन्तु अब आपसमा प्रेमी तथा मित्र बनिहाले, शताब्दी पुराना बने यसप्रकार समाप्त गरी आपसी प्रेमभाव उत्पन्न गरिदिनु, यो अल्लाह तआलाको विशेष कृपा थियो, तथा उसको सामर्थ्य तथा इच्छाको प्रभाव थियो अन्यथा यो यस्तो कार्य थियो कि संसारभरिका कोष व्यय गर्नाले पनि यो अमूल्य रत्न प्राप्त हुन सक्दैनथ्यो । अल्लाह तआलाले आफ्नो यस उपकारलाई सूरः आले इमरानको आयत संख्या १०३ मा भनेको छ । ﴿إِذْ كُنتُمْ أَعْدَآءً فَأَلَّفَ بَيْنَ قُلُوبِكُمْ﴾ तथा नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि हुनैनको परिहारको विभाजित हुने अवसरमा अन्सारलाई सम्बोधित गर्दै भन्नुभयो, “हे अन्सारका गुट ! के यो सत्य होइन कि तिमी मार्ग-विचलित भएका थियौ, अल्लाहले मेरो माध्यमबाट तिमीलाई मार्गदर्शन प्रदान गऱ्यो, तिमी निर्धन थियौ अल्लाहले तिमीलाई मेरो माध्यमबाट खुशीयाली प्रदान गऱ्यो तथा तिमी एक-अर्काकाबाट अलग-अलग थियौ, अल्लाहले मेरो माध्यमबाट तिमीलाई आपसमा जोडिदियो ।” नबी सल्लल्लाहु अलैहि वसल्लम जुनकुरा पनि भन्दाखेरि अन्सार त्यसको उत्तरमा यही भन्दथे (اللهُ وَرَسُولُهُ أَمَنُّ) (“अल्लाह तथा त्यसका रसूलका उपकार यसभन्दा धेरै अधिक छन् ।” (सहीह बुख़ारी किताबुल मग़ाजी बाब गज़वातुत तायेफ़ र सहीह मुस्लिम किताबुल ज़कात बाब ऐताऊल मूअल्लिफते कुलूबुहुम अलल इस्लाम)

प्रेम उत्पन्न गरिदियो नि:सन्देह त्यो प्रभावी विज्ञाता छ ।

يَٰٓأَيُّهَا ٱلنَّبِيُّ حَسْبُكَ ٱللَّهُ وَمَنِ ٱتَّبَعَكَ مِنَ ٱلْمُؤْمِنِينَ ﴿٦٤﴾

(६४) हे नबी ! (ईशदूत) तपाईं तथा तपाईंका अनुयायी मुसलमानहरूलाई अल्लाह पर्याप्त छ ।

يَٰٓأَيُّهَا ٱلنَّبِيُّ حَرِّضِ ٱلْمُؤْمِنِينَ عَلَى ٱلْقِتَالِ ۚ إِن يَكُن مِّنكُمْ عِشْرُونَ صَٰبِرُونَ يَغْلِبُوا۟ مِا۟ئَتَيْنِ ۚ وَإِن يَكُن مِّنكُم مِّا۟ئَةٌ يَغْلِبُوٓا۟ أَلْفًا مِّنَ ٱلَّذِينَ كَفَرُوا۟ بِأَنَّهُمْ قَوْمٌ لَّا يَفْقَهُونَ ﴿٦٥﴾

(६५) हे ईशदूत ! मुसलमानहरूलाई जिहाद (धर्मयुद्ध) को प्रलोभन देउ ।[1] यदि तिमीमध्ये बीस धैर्यवान पनि हुनेछन् भने, तैपनि दुईसयमाथि प्रभावी रहनेछन् । तथा यदि तिमीमध्ये एकसय हुनेछन् भने एक हजार काफिरहरूमाथि प्रभावी रहनेछन् ।[2] यसकारण कि उनीहरू अज्ञानी छन् ।

ٱلْـَٰٔنَ خَفَّفَ ٱللَّهُ عَنكُمْ وَعَلِمَ أَنَّ فِيكُمْ ضَعْفًا ۚ فَإِن يَكُن مِّنكُم مِّا۟ئَةٌ صَابِرَةٌ يَغْلِبُوا۟ مِا۟ئَتَيْنِ ۚ

(६६) अब अल्लाह तिम्रो बोझलाई हल्का पार्दछ, त्यो राम्ररी जान्दछ कि तिमीमा निर्बलता छ, त यदि तिम्रा एकसय धैर्यवान हुनेछन् भने उनीहरू दुईसयमाथि प्रभावी रहनेछन् ।

[1](تَحْرِيض) तहरीजको अर्थ प्रलोभन दिनुमा अति गर्नु अर्थात् उत्तेजित गर्नु एवं भड्काउनु हो अत: तद्अनुसार ईशदूत युद्धभन्दा पूर्व सहाबालाई जिहाद (धर्मयुद्ध) को प्रलोभन दिनुहुन्थ्यो तथा त्यसको महत्वको चर्चा गर्नुहुन्थ्यो जस्तो कि 'बद्र' को अवसरमा जब मूर्तिपूजक आफ्ना ठूला संख्या तथा परिपूर्ण साधनहरूका साथ रणक्षेत्रमा उपस्थित भए त उहाँले भन्नुभयो "यस्तो स्वर्गमा प्रवेशका लागि तयार होऊ जसको विस्तार आकाशहरू एवं धर्तीको समतुल्य छ ।" एक सहाबी उमैर पुत्र हमामले भन्नुभयो आकाशहरू एवं धर्तीको चौडाइको बराबर ? उहाँले भन्नुभयो "हो" । यसमाथि उनले बख़-बख़ भन्नुभयो अर्थात् प्रसन्नता व्यक्त गर्नुभयो तथा यो आशा व्यक्त गर्नुभयो कि म पनि स्वर्गवासीहरूमा रहनेछु, उहाँले भन्नुभयो, तिमी स्वर्गवासीमा हुनेछौ । अनि आफ्नो तलवारको खोल तोडिदिनु भयो र केही खजूरहरू निकालेर खान थाल्नु भयो । त्यसपछि शेष फालिदिनु भयो तथा भन्नुभयो यिनलाई खानुसम्म जीवित रहें भने यो लामो आयु हुनेछ अनि अगाडी बढे एवं साहस देखाउन थाले यहाँसम्मकि शहीद (बलिदान) भइहाले । (सहीह मुस्लिम किताबुल इमार अध्याय स्वर्गको प्रमाण शहीद हेतु)

[2]यो मुसलमानहरूको लागि शुभ-सूचना हो कि तिम्रा दृढताले लड्ने बीस सैनिक दुई सय माथि तथा सय एक हजारमाथि प्रभावशाली रहनेछन् ।

وَإِن يَكُن مِّنكُمْ أَلْفٌ يَغْلِبُوٓا۟ أَلْفَيْنِ بِإِذْنِ ٱللَّهِ ۗ وَٱللَّهُ مَعَ ٱلصَّٰبِرِينَ ﴿٦٦﴾

तथा यदि तिम्रा एक हजार हुनेछन् भने, उनीहरू अल्लाहका आदेशले दुई हजारमाथि प्रभावी रहनेछन्।[1] तथा अल्लाह (तआ़ला) धैर्यवानहरूको साथमा छ।[2]

مَا كَانَ لِنَبِيٍّ أَن يَكُونَ لَهُۥٓ أَسْرَىٰ حَتَّىٰ يُثْخِنَ فِى ٱلْأَرْضِ ۚ تُرِيدُونَ عَرَضَ ٱلدُّنْيَا وَٱللَّهُ يُرِيدُ ٱلْءَاخِرَةَ ۗ وَٱللَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٦٧﴾

(६७) नबीको हातमा कैदी हुनुहुँदैन, जबसम्मकि देशमा हिंसक युद्ध हुँदैन। तिमी त संसारको धन चाहन्छौ तथा अल्लाहको विचार परलोकको छ।[3] तथा अल्लाह तआ़ला प्रभावशाली विज्ञाता छ।



[1]पछिल्लो आदेश सहाबामाथि गह्रुँगो भयो, किनभने यसको अर्थ थियो एक मुसलमान दस काफिरहरूका लागि, बीस दुईसयका लागि तथा एकसय एक हजारका लागि पर्याप्त छ। तथा काफ़िरहरूका सापेक्ष मुसलमानहरूको यति संख्या छ भने धर्मयुद्ध अनिवार्य तथा यसबाट बच्नु अनुचित छ। अतः अल्लाह तआ़लाले कमी गरेर एक र त्यसको अनुपातलाई एक र दुईको अनुपात गरिदियो। (सहीह बुख़ारी तफ़सीर सूरः अल-अंफाल) अब यस अनुपातमा धर्मयुद्ध आवश्यक तथा यसभन्दा कममा अनावश्यक छ।

[2]यो भनेर धैर्य एवं साहसले लड्नुको महत्वमाथि जोड दियो कि अल्लाहको सहायताको लागि यसको तत्वाधान आवश्यक छ।

[3]बद्रको रणमा सत्तरी मूर्तिपूजक मरे एवं यतिकै संख्यामा बन्दी बनाइए। यो इस्लाम एवं अधर्मका बीचको प्रथम रण थियो, अतः बन्दीहरूको विषयमा के नीति हुनुपर्छ यस सन्दर्भमा आदेश पूर्णरूपले थिएन अतः ईशदूतले यस विषयमा परामर्श लिनुभयो कि उनीहरूलाई वध गरियोस् अथवा प्रतिशोधमा धन लिएर मुक्त गरियोस्। उचितको परिधिमा दुबैको अवकाश थियो। अतः दुबै विचाराधीन आयो किन्तु कुनै अवसरमा उचितोचितबाट अलग्ग स्थितिहरू तथा समयानुसार अधिक उत्तम नीति अपनाउनुको आवश्यकता हुन्छ, यहाँपनि आवश्यकता अति उत्तम नीति अपनाउनु थियो किन्तु उचितलाई दृष्टिगत गर्दा न्यूनतम् नीति अपनाइयो जसमाथि अल्लाहको क्रोध उत्र्यो। परामर्शमा आदरणीय उमर आदिको विचार थियो कि अधर्मको प्रभावलाई तथा गर्वलाई तोड्नको निम्ति आवश्यक छ कि यी कैदीहरूलाई वध गरिदिइयोस् किनभने यिनीहरू अधर्म एवं अधर्मीहरूका प्रमुख हुन्। यिनी स्वतन्त्र रूपले मुसलमानहरूका विरूद्ध अधिक षड्यन्त्र रच्नेछन् जबकि आदरणीय अबु-बक्र आदिको विचार यसको विपरीत यो थियो कि प्रतिशोधमा धन लिएर उनीहरूलाई मुक्त गरिदिइयोस् तथा त्यस धनबाट आगामी युद्धको तयारी गरियोस्।

لَوْلَا كِتٰبٌ مِّنَ اللّٰهِ سَبَقَ لَمَسَّكُمْ فِيْمَآ اَخَذْتُمْ عَذَابٌ عَظِيْمٌ ﴿٦٨﴾

(६८) यदि पहिलादेखि नै अल्लाहको तर्फबाट कुरा नलेखिएको भए[1] त जे-जति तिमीले लिएका छौ, त्यसको विषयमा तिमीलाई कुनै घोर यातना हुने थियो ।

فَكُلُوْا مِمَّا غَنِمْتُمْ حَلٰلًا طَيِّبًا ۖ وَّاتَّقُوا اللّٰهَ ۭ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٦٩﴾

(६९) अतः जुन वैध एवं पवित्र धन लडाईंबाट प्राप्त गर्दछौ त्यसलाई खाउ ।[2] तथा अल्लाहसित तर्सने गर, निःसन्देह अल्लाह तआ़ला अत्याधिक करूणामयी तथा कृपालु छ ।

يٰٓاَيُّهَا النَّبِيُّ قُلْ لِّمَنْ فِيْٓ اَيْدِيْكُمْ مِّنَ الْاَسْرٰٓى ۙ اِنْ يَّعْلَمِ اللّٰهُ

(७०) हे नबी ! आफ्नो कब्जामा भएका कैदीहरूसित भनिदेउ कि यदि अल्लाह तआ़ला तिम्रा

ईशदूतले यसै विचारलाई उचित भन्नुभयो जसपश्चात यो आयत अवतरित भयो जसको तात्पर्य यो हो कि यदि देशमा अधर्मको प्रभाव छ (जस्तो कि त्यस समय अरब देशमा थियो) त अधर्मीहरूको रक्तपात गरेर अधर्मको शक्तिलाई तोड्नु आवश्यक छ । यस विन्दुलाई त्यागेर तिमीले धन लिएका छौ त तिमीले उत्तमको ठाउँ न्यूनतमको नीति अपनायौ जो तिम्रो भूल हो । अन्त्यमा जब अधर्मको बल टुट्यो त मुसलमानहरूका राज्य प्रमुखहरूलाई अधिकार दिइयो कि बन्दीहरूलाई चाहन्छन् भने वध गरिदेऊन् अथवा धन लिएर मुक्त गरिदेऊन् वा मुसलमान बन्दीहरूबाट साटून् तथा परिस्थिति अनुसार दास बनाऊन्, यी सबैको अनुमति छ ।

[1]यसमा व्याख्याकारहरूको मतभेद छ कि यो लेखिएको कुरो के थियो ? केहीले भनें कि यसबाट तात्पर्य युद्धमा प्राप्त धन-सामग्रीलाई अवर्जित गर्नुको आदेश छ अर्थात् यो भाग्य लेख लेखिएको थियो कि मुसलमानहरूलाई युद्धमा प्राप्त धन सामग्री अवर्जित हुनेछ । यसकारण तिमीले फिदिया लिएर उचित कार्य गर्‍यो यदि यस्तो नभएको भए फिदिया तिर्नुको कारण तिमीलाई अत्याधिक प्रकोप सहन गर्नु पर्दथ्यो । केहीले बद्रमा शहीद हुनेहरूको क्षमा-याचना, यसबाट तात्पर्य लिएका छन् । केहीले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको उपस्थितिलाई प्रकोप नआउनुको कारण तात्पर्य लिएका छन् आदि (विस्तारपूर्वक जानकारीका लागि हेर्नुस् फ़तहुल कदीर)

[2]यसमा युद्धमा प्राप्त माल सामग्रीलाई उचित तथा पवित्र ठहराई फिदियालाई उचित हुनु भनिएको छ जसबाट यो कुरोको समर्थन हुन्छ कि "लेखिएको कुरा" शायद यसबाट तात्पर्य युद्धमा प्राप्त धन सामग्री हुन् ।

فِيْ قُلُوْبِكُمْ خَيْرًا يُّؤْتِكُمْ خَيْرًا مِّمَّآ اُخِذَ مِنْكُمْ وَ يَغْفِرْ لَكُمْ ؕ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ۝

हृदयमा पुण्य विचार देख्छ,[1] भने जे-जति तिमीबाट लिइएको छ, त्यसभन्दा उत्तम तिमीलाई प्रदान गर्नेछ ।[2] तथा त्यसपछि पाप पनि क्षमा गरिदिनेछ तथा अल्लाह क्षमाशील कृपालु छ ।

وَاِنْ يُّرِيْدُوْا خِيَانَتَكَ فَقَدْ خَانُوا اللّٰهَ مِنْ قَبْلُ فَاَمْكَنَ مِنْهُمْ ؕ وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ۝

(७१) तथा यदि उनीहरू तिमीसित विश्वासघातका विचार गर्नेछन् भने यिनीहरू त यसभन्दा पूर्व स्वयं अल्लाहसँग विश्वासघात गरिसकेका छन् । अन्तत: उसले तिमीलाई उनीहरूमाथि अधिकार दिहाल्यो ।[3] तथा अल्लाह तआ़ला सर्वज्ञाता बडो तत्वदर्शी छ ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَهَاجَرُوْا وَجٰهَدُوْا بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ فِيْ سَبِيْلِ اللّٰهِ وَالَّذِيْنَ اٰوَوْا وَّ نَصَرُوْٓا

(७२) जसले (इस्लाम) धर्मप्रति ईमान स्थापित गरे एवं हिज़रत (प्रस्थान) गरे तथा आफ्नो धन, प्राणले अल्लाहको मार्गमा जिहाद (धर्मयुद्ध) गरे ।[4] एवं जसले उनीहरूलाई शरण तथा सहायता दिए,[5] यी सबै

[1]अर्थात् ईमान तथा इस्लाम स्वीकार गरिहाल्नुको विचार तथा त्यसलाई स्वीकार गर्नुको भावना हो ।

[2]अर्थात् जुन फिदिया तिमीबाट लिइएको छ यसभन्दा उत्तम अल्लाह तआ़लाले तिमीलाई इस्लाम स्वीकार गरे पश्चात प्रदान गर्नेछ । अत: यस्तै भयो । आदरणीय अब्बास (رضی اللّٰہ عنہ) आदि जो उनका कैदीहरू मध्येका थिए, मुसलमान भए, त त्यस पश्चात अल्लाहले उनीहरूलाई सांसारिक धन वैभव पनि अधिक प्रदान गऱ्यो ।

[3]अर्थात् मुखले इस्लाम स्वीकार गर्छन् परन्तु उद्देश्य धाका दिनुहुन्छ भने यसभन्दा पूर्व उनीहरूले अविश्वास तथा मिश्रण (शिर्क) गरी के पो प्राप्त गरे ? यही कि उनीहरू मुसलमानहरूका बन्दी बने, यसकारण यदि भविष्यमा पनि अनेकेश्वरवादको मार्गमा स्थिर रहे भने यसभन्दा अत्याधिक अपमान बाहेक अरु केही प्राप्त हुनेछैन ।

[4]यी "सहाबा" मुहाजेरीन (जो मक्का नगरी त्याग गरी मदीना आए) कहलाइन्छन्, जो महानतामा सहाबामा सर्वश्रेष्ठ छन् ।

[5]यिनी अन्सार कहलाइन्छन् (यी मदीनाका मूल निवासी हुन्) यिनी श्रेष्ठताको दोस्रो स्थानमा छन् ।

أُولَٰٓئِكَ بَعۡضُهُمۡ أَوۡلِيَآءُ بَعۡضٖۚ وَٱلَّذِينَ ءَامَنُواْ وَلَمۡ يُهَاجِرُواْ مَا لَكُم مِّن وَلَٰيَتِهِم مِّن شَيۡءٍ حَتَّىٰ يُهَاجِرُواْۚ وَإِنِ ٱسۡتَنصَرُوكُمۡ فِي ٱلدِّينِ فَعَلَيۡكُمُ ٱلنَّصۡرُ إِلَّا عَلَىٰ قَوۡمِۭ بَيۡنَكُمۡ وَبَيۡنَهُم مِّيثَٰقٞۗ وَٱللَّهُ بِمَا تَعۡمَلُونَ بَصِيرٞ ٧٢

एक-अर्काका मित्र हुन् ।[१] तथा जो ईमान कायम गरे तर हिज़रत (प्रवास) गरेनन् तिमीसित उनको अलिकति पनि मित्रता छैन जबसम्मकि उनी हिज़रत (देश त्याग) गर्दैनन् ।[२] हो यदि उनीहरू धर्मको विषयमा तिमीसित सहायता माँगदछन् भने तिम्रो लागि सहायता दिनु आवश्यक छ ।[३] यस अवस्था बाहेक कि जब यो सहायता कुनै यस्ता कौमका लागि होस् जससित तिम्रो कुनै संधि छ ।[४] तथा जे-जति पनि तिमी गरिराखेका छौ अल्लाह र म्रारी देखिराखेको छ ।

وَٱلَّذِينَ كَفَرُواْ بَعۡضُهُمۡ أَوۡلِيَآءُ بَعۡضٍۚ إِلَّا تَفۡعَلُوهُ تَكُن فِتۡنَةٞ فِي ٱلۡأَرۡضِ وَفَسَادٞ كَبِيرٞ ٧٣

(७३) तथा विश्वासहीन परस्पर एक-अर्काका मित्र हुन् । यदि तिमीले यस्तो गरेनौं भने देशमा आतङ्क तथा घोर उत्पात हुनेछ ।[५]

---

[१]अर्थात् एक-अर्काका सहायक तथा पक्षधर हुन् । तथा केही जानकारले भने कि परस्परका उत्तराधिकारी हुन् जस्तो कि हिज़रत पश्चात नबी सल्लल्लाहु अलैहि वसल्लमले एक-एक मुहाजिर तथा एक-एक अन्सार बीच भाइचारा सौहार्द गराइदिनु भएको थियो । यहाँसम्मकि उनीहरू एक-अर्काका उत्तराधिकारी पनि बन्दथे । (पछि उत्तराधिकारीको आदेश निरस्त गरियो ।

[२]यो सहाबाको तेस्रो श्रेणी हो, जुन मुहाजिर तथा अन्सारका अतिरिक्त हुन् । यी मुसलमान भए पश्चात आफ्नै क्षेत्र तथा जातिमा रहन्थे । यसकारण आदेश भयो कि तिम्रा पक्ष अथवा उत्तराधिकारका उनीहरू अधिकारी छैनन् ।

[३]मूर्तिपूजकहरूका विरूद्ध सहायता माँगदछन् भने उनको सहायता गर्नु आवश्यक छ ।

[४]हो यदि उनी तिमीसित यस्ता समुदायका विरूद्ध सहायता माँग्छन् जसका तथा तिम्रो बीच सन्धि एवं युद्ध नगर्नुको संप्रतिज्ञा छ त मुसलमान सहायताको अपेक्षा संविदाको पालन आवश्यक छ ।

[५]अर्थात् जुनप्रकार अधर्मी परस्पर मित्र एवं पक्षधर छन्, त्यसैप्रकार यदि तिमी पनि ईमानको आधारमा परस्पर पक्षपात तथा कृतघ्नहरूसित सम्बन्ध विच्छेद राखेनौं भने त ठूलो उपद्र हुनेछ । र त्यो यो हो कि ईमान भएका तथा काफ़िरहरूमा आपसी मेलमिलापबाट ।

وَالَّذِينَ آمَنُوا وَهَاجَرُوا وَجَاهَدُوا فِي سَبِيلِ اللَّهِ وَالَّذِينَ آوَوا وَّنَصَرُوا أُولَٰئِكَ هُمُ الْمُؤْمِنُونَ حَقًّا ۚ لَّهُم مَّغْفِرَةٌ وَرِزْقٌ كَرِيمٌ ﴿٧٤﴾

(७४) जसले ईमान स्थापित गरे तथा प्रवास गरे एवं अल्लाहको मार्गमा धर्मयुद्ध गरे तथा जसले आश्रय दिए तथा सहायता पुऱ्याए। ती नै सच्चा ईमान भएका हुन्, उनीहरूका लागि क्षमा तथा सम्मान पूर्ण जीविका छ।[१]

وَالَّذِينَ آمَنُوا مِن بَعْدُ وَهَاجَرُوا وَجَاهَدُوا مَعَكُمْ فَأُولَٰئِكَ مِنكُمْ ۚ وَأُولُو الْأَرْحَامِ بَعْضُهُمْ أَوْلَىٰ بِبَعْضٍ فِي كِتَابِ اللَّهِ ۗ إِنَّ اللَّهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٧٥﴾

(७५) तथा जो यसका पश्चात ईमान कायम गरे तथा प्रवास गरे र तिम्रो साथमा धर्मयुद्ध गरे तिनीहरू पनि तिमी मध्येका नै हुन्।[२] तथा जाति सम्बन्धि भएका तिनीहरू परस्पर एक-अर्काका अधिक समीपवर्ती छन् अल्लाहको आदेशमा,[३] निःसन्देह अल्लाह सर्वज्ञ छ।

धर्मको सम्बन्धमा शंका तथा आलस्य उत्पन्न हुनेछ। केही विद्वानहरूले ﴿بَعْضُهُمْ أَوْلَىٰ بِبَعْضٍ﴾ सित उत्तराधिकारी हुनु भाव निकालेका छन् तथा अर्थ यो हो कि एक मुसलमान काफ़िरको तथा काफ़िर मुसलमानको उत्तराधिकारी हुनसक्दैन। जस्तो कि हदीसमा यसलाई अधिक स्पष्टरूपले बुझाइएको छ। यदि तिमी उत्तराधिकारमा कुफ्र तथा ईमानमा ध्यान नदिई मात्र जाति सम्बन्धलाई समक्ष राख्नेछौ भने यसभन्दा ठूलो उत्पात तथा अशान्ति पैदा हुनेछ।

[१]यो उपरोक्त मोहाजिरीन तथा अन्सारका दुई गुटहरूको चर्चा हो, जसको वर्णन पहिले भइसकेको छ। यहाँ पुनः वर्णन उनको प्रधानता व्यक्त गर्नको लागि हो। जबकि उनको पूर्व चर्चा परस्पर सहायता एवं पक्षपातको अनिवार्यताको वर्णनको लागि थियो।

[२]यो एउटा चौथो गुटको चर्चा हो, जो श्रेष्ठतामा पहिला दुई गुटका पश्चात तथा तेस्रो गुट जसले हिज़रत गरेका थिएनन्, भन्दा प्रथम छ।

[३]भाइचारा तथा शपथको आधारमा उत्तराधिकारमा जो भागीदार बन्दथे। यस आयतमा त्यसलाई निरस्त गरिदिएको छ। अब उत्तराधिकारी त्यही हुनेछ जसको वंशीय अथवा ससुराली सम्बन्ध हुनेछ। अल्लाहको किताब अथवा अल्लाहको आदेशबाट तात्पर्य हो कि 'सुरक्षित पुस्तक' मा मूल आदेश यही थियो। परन्तु भाइचाराको आधारमा अस्थाई रूपले एक-अर्कालाई उत्तराधिकारी बनाइएको थियो, जुन अब आवश्यकता समाप्त भए पश्चात अनावश्यक भयो तथा मूल आदेश लागू गरियो।

## सूरतुत्तौबः-९

سُورَةُ التَّوْبَةِ

सूरः तौबः मदीनामा अवतरित भएको तथा यसमा एक सय उनन्तीस आयतहरु एवं सोह्र रुकूअ छन् ।

بَرَآءَةٌ مِّنَ اللَّهِ وَرَسُولِهِۦٓ إِلَى الَّذِينَ عَٰهَدتُّم مِّنَ الْمُشْرِكِينَ ①

(१) (यो) अल्लाह एवं त्यसका रसूल (दूत) को तर्फबाट विमुक्तिको घोषणा हो[1] ती मिश्रणवादीहरुको सम्बन्धमा जोसित तिमीले सन्धि (मुआहदः) गरेका छौ ।

فَسِيحُوا فِي الْأَرْضِ أَرْبَعَةَ أَشْهُرٍ

(२) अतः (हे मिश्रणवादीहरू !) तिमी देशमा चार महिना यातायात गरिहाल [2] तथा जानिहाल

(*) **नामकरणका कारण :-** यसका व्याख्याकारहरुले कैयन् नामहरुको वर्णन गरेका छन्, तर अधिक प्रसिद्ध दुईवटा नाम छन् प्रथम 'तौबा' स्वीकार हुने कुरोको वर्णन छ । दोस्रो नाम 'बराअत' हो । यसकारण कि यसमा मूर्तिपूजकहरुद्वारा सन्धिबाट मुक्तिको घोषणा गरिएको छ । यो कुर्आन मजीदको एउटा मात्र सूरः हो जसको प्रारम्भमा बिस्मिल्लाह हिर्रहमानिर्रहीम लेखिएको छैन यसका पनि विभिन्न कारण भाष्य पुस्तकहरुमा लेखिएका छन् । परन्तु अधिक उचित कुरो यो लाग्छ कि सूरः अंफाल तथा सूरः तौबा यी दुबैको विषयमा समानता पाईन्छ । अतः यो सूरः अंफालको पूरक अथवा शेष हो । यो सात ठूला सूरःहरुमध्ये सातौं ठूलो सूरः हो, जसलाई सबआ तिवाल भनिन्छ ।

[1]मक्का विजय पश्चात नौ हिजरीमा नबी सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय अबू बक्र, आदरणीय अली (رضى الله عنهما) तथा अन्य केही सहचरहरुलाई यी आयतहरु तथा आदेश दिएर पठाउनु भयो ताकि उनी मक्कामा तिनलाई जन-सामान्यका समक्ष घोषित गरिदेऊन् । उनीहरुले उहाँ सल्लल्लाहु अलैहि वसल्लमका आदेशानुसार घोषणा गरे कि कुनै व्यक्ति अब (काअबा) को नाङ्गो अवस्थामा परिक्रमा गर्नसक्ने छैन । बरु आगामी वर्षबाट कुनै मूर्तिपूजकलाई बैतुल्लाह (अल्लाहको घर) को हजको आज्ञा प्रदान गरिने छैन । (सहीह बुख़ारी संख्या १३६९, मुस्लिम संख्या ९८३)

[2]यो मुक्तिको घोषणा ती मूर्तिपूजकहरुको लागि थियो जससित बिना अवधिका सन्धिहरु थिए अथवा चार महिनाभन्दा कमका थिए अथवा जसबाट चार महीना अथवा त्यसभन्दा अधिकका त थिए, परन्तु उनीहरूका तर्फबाट सन्धिका नियमहरुको पालन भइराखेको थिएन । ती सबैलाई चार महिनाको अवधिसम्म मक्कामा निवासको समय दिइयो । यसको अर्थ यो थियो कि यदि चार महिनाभित्र इस्लाम स्वीकार गर्दछन् भने उनीहरूलाई यहाँ बस्नुको आज्ञा हुनेछ अन्यथा उनको

وَاعْلَمُوْٓا اَنَّكُمْ غَيْرُ مُعْجِزِي اللّٰهِ ۙ وَ اَنَّ اللّٰهَ مُخْزِي الْكٰفِرِيْنَ ②

कि तिमी अल्लाहलाई विवश गर्न सक्दैनौं तथा अल्लाह विश्वासहीनहरुलाई निरादर गर्नेछ ।[1]

وَ اَذَانٌ مِّنَ اللّٰهِ وَ رَسُوْلِهٖٓ اِلَى النَّاسِ يَوْمَ الْحَجِّ الْاَكْبَرِ اَنَّ اللّٰهَ بَرِيْٓءٌ مِّنَ الْمُشْرِكِيْنَ ۙ۬ وَرَسُوْلُهٗ ؕ فَاِنْ تُبْتُمْ فَهُوَ خَيْرٌ لَّكُمْ ۚ وَاِنْ تَوَلَّيْتُمْ فَاعْلَمُوْٓا اَنَّكُمْ غَيْرُ مُعْجِزِي اللّٰهِ ؕ وَ بَشِّرِ الَّذِيْنَ كَفَرُوْا بِعَذَابٍ اَلِيْمٍ ۙ③

(३) अल्लाह एवं त्यसको रसूल (दूत) को तर्फबाट महाहजका दिन[2] स्पष्ट घोषणा छ कि अल्लाह मिश्रणवादीहरुसित असन्तुष्ट छ तथा त्यसका दूत पनि, यदि अहिले पनि तिमी क्षमा-याचना गर्छौ भने तिम्रो लागि उत्तम छ तथा यदि तिमी विमुख हुन्छौ भने जानिहाल कि तिमी अल्लाहलाई विवश गर्न सक्ने छैनौ तथा विश्वासहीनहरू (काफ़िरहरु) लाई घोर यातनाको शुभ समाचार दिदेऊ ।

लागि यो आवश्यक हुनेछ कि अरब महाद्वीपबाट निस्केर जाऊन् । यदि यी दुबै नियमहरुमध्ये उनीहरू कुनै पनि अपनाउँदैनन् भने उनको गणना ती काफ़िरहरुमा हुनेछ जोसित युद्ध गर्नु मुसलमानहरुका लागि आवश्यक हुनेछ, ताकि अरब महाद्वीप अनेकेश्वरवाद तथा मूर्तिपूजाबाट पवित्र होस् ।

[1]अर्थात् यो समय यसकारण दिइराखिएको छैन कि यसबेला तिम्रा विरुद्ध कारवाही सम्भव छैन, बरु यसको उद्देश्य पनि तिम्रो भलो तथा लाभ हो, जो तौबा गरी मुसलमान हुन चाहन्छ, त त्यो मुसलमान बनोस् । अन्यथा याद राख कि तिम्रो लागि अल्लाहले आफ्नो विवेकबाट भाग्यमा लेखेको छ, त्यसलाई तिमी समाप्त गर्न सक्दैनौ तथा अल्लाहको तर्फबाट उतारिएको अपमान तथा अनादरबाट तिमी बच्न सक्दैनौं ।

[2]सहीह बुख़ारी मुस्लिम तथा अन्य सहीह हदीसका किताबहरुबाट सिद्ध छ कि हज़ अक़बरका दिनबाट तात्पर्य यौमुन्नहर (अर्थात् १० ज़िलहिज्जा) को दिन हो । (तिर्मिज़ी संख्या ९५७ बुख़ारी संख्या ४६५५ र मुस्लिम संख्या ९८२) त्यसै दिन मिनाको स्थानमा मुक्तिको घोषणा गरियो । १० ज़िलहिज्जाको हज अकबर यसकारण भनिन्छ कि यस दिन हज़का सबभन्दा धेरै तथा विशेष धार्मिक रीतिहरु सम्पन्न गरिन्छ तथा जनमानस उमराको हज़लाई 'असगर' भन्ने गर्दथे । यसकारण उमराभन्दा श्रेष्ठ गर्नको निम्ति हज़लाई महाहज (अक़बर) भनियो । मानिसहरुमा यो भनाई जुन प्रसिद्ध छ कि शुक्रवारका दिन आउने हज़ अकबर, निराधार छ ।

إِلَّا الَّذِينَ عَاهَدتُّم مِّنَ الْمُشْرِكِينَ ثُمَّ لَمْ يَنقُصُوكُمْ شَيْئًا وَلَمْ يُظَاهِرُوا عَلَيْكُمْ أَحَدًا فَأَتِمُّوا إِلَيْهِمْ عَهْدَهُمْ إِلَىٰ مُدَّتِهِمْ ۚ إِنَّ اللَّهَ يُحِبُّ الْمُتَّقِينَ ④

(४) परन्तु ती मिश्रणवादी जोसित तिमीले संविदा (सन्धि) गरेका छौ तथा उनीहरूले तिमीलाई अलिकति पनि हानि पुऱ्याएनन् तथा तिम्रो विरुद्ध कसैको सहायता गरेनन् भने तिमी पनि सन्धिको अवधि उनीहरूसँग पूरा गर। निःसन्देह अल्लाह संयमीहरूसित प्रेम गर्दछ।[1]

فَإِذَا انسَلَخَ الْأَشْهُرُ الْحُرُمُ

(५) अनि प्रतिष्ठित महिनाहरु[2] व्यतीत हुने बित्तिकै बहुईश्वरवादीहरुलाई जहाँ फेला पार्छौ वध गर।[3]

---

[1]मूर्तिपूजकहरुको यो चौथो श्रेणी हो, यिनीहरुसित जति अवधिको सन्धि थियो उनीहरूलाई त्यति समय रहनुको आज्ञा दिइयो। किनभने उनीहरूले सन्धिको नियमहरुको पालन गरे तथा त्यसको विरुद्ध कुनै काम गरेनन् यसकारण मुसलमानहरूको लागि पनि त्यसको पालना आवश्यक भनियो।

[2]यी प्रतिष्ठित महिनाहरुबाट के तात्पर्य छ? यसमा मतभेद छ। एक विचार त यो छ कि यसबाट तात्पर्य तिनै चार महिना हुन् जुन सम्मानित छन्। अर्थात मोहर्रम, रजब, ज़ीक़ादः तथा ज़िलहिज्जाः। तथा विमुक्तिको घोषणा १० ज़िलहिज़्जामा गरियो। यस आधारमा यो भयो कि जस्तो उनीहरूलाई केवल पचास दिनको समय दिइयो किनभने सम्मानित महिनाहरु व्यतीत भए पश्चात मूर्तिपूजकहरुलाई समाति वध गर्नुको आज्ञा दिइएको थियो। परन्तु इमाम इब्ने क़सीरका अनुसार यहाँ निषेधित महिनाहरु होइनन्। बरु १० ज़िलहिज़्जादेखि १० रबीउस्सानी सम्मका चार महिना तात्पर्य हुन्। तिनीहरूलाई सम्मानित महिना यसकारण भनिएको छ कि विमुक्तिको घोषणाको आधारमा यी चार महिनामा ती मूर्तिपूजकहरुसित लड्न तथा उनका विरुद्ध कुनै पनि कार्यवाहीको आज्ञा थिएन। मुक्तिको घोषणाको आधारमा यो तर्क अधिक उचित प्रतीत हुन्छ।

[3]केही व्याख्याकारहरुले यस आदेशलाई सामान्य मानेका छन् अर्थात् हरमका क्षेत्र अथवा त्यसका बाहिरका क्षेत्रमा जहाँपनि फेला पार्छौ, मार। तथा केही व्याख्याकारहरुले सूरः बक़रःको यो आयत वर्णन गरेका छन्।

﴿ وَلَا تُقَاتِلُوهُمْ عِندَ الْمَسْجِدِ الْحَرَامِ حَتَّىٰ يُقَاتِلُوكُمْ فِيهِ ۖ فَإِن قَاتَلُوكُمْ فَاقْتُلُوهُمْ ﴾

"मस्जिदे हरामका निकट उनीसित न लड जबसम्मकि तिनीहरु स्वयं तिमीसँग न लड्नु, यदि उनी लड्छन् भने तिमीलाई पनि उनीसित लड्ने आज्ञा छ।" (सूरः अल-बक़रः-१९१)

यस आयतबाट विशेष निर्धारण गरी केवल हरमको सीमाभन्दा बाहिरका क्षेत्रमा वध गर्नुको आज्ञा प्रदान गरिएको छ। (इब्ने कसीर)

فَاقْتُلُوا الْمُشْرِكِيْنَ حَيْثُ وَجَدْتُّمُوْهُمْ وَخُذُوْهُمْ وَاحْصُرُوْهُمْ وَاقْعُدُوْا لَهُمْ كُلَّ مَرْصَدٍ ۚ فَاِنْ تَابُوْا وَاَقَامُوا الصَّلٰوةَ وَاٰتَوُا الزَّكٰوةَ فَخَلُّوْا سَبِيْلَهُمْ ۚ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ۝

उनीहरुलाई बन्दी बनाउ ।[1] उनको घेराउ गर तथा उनको ताकमा (घातमा) हरेक ठाउँमा बस ।[2] तर यदि उनीहरु क्षमा-याचना गर्दछन् तथा नमाज़ स्थाई रूपले निरन्तर पढ्छन् तथा ज़कात दिन्छन्, भने तिमी उनको मार्ग छाडिदेउ ।[3] निःसन्देह अल्लाह तआला क्षमाशील कृपालु छ ।

وَاِنْ اَحَدٌ مِّنَ الْمُشْرِكِيْنَ اسْتَجَارَكَ فَاَجِرْهُ حَتّٰى يَسْمَعَ كَلٰمَ اللّٰهِ ثُمَّ اَبْلِغْهُ مَاْمَنَهٗ ۚ

(६) यदि मिश्रणवादीहरु मध्येबाट कोही तिमीसित शरण माँग्छ भने उसलाई शरण प्रदान गरिदेउ यहाँसम्मकि त्यो अल्लाहको कथन सुनोस अनि त्यसलाई उसको शान्ति स्थानसम्म पुऱ्याइदेउ ।[4] यो यस

[1]अर्थात् उनीहरूलाई बन्दी बनाइहाल अथवा वध गरिदेऊ ।

[2]अर्थात् यस कुरामा नटुङ्ग्याउ कि उनीहरू जहाँ पाइन्छन् कारवाही गर बरु जहाँ-जहाँ उनका सुरक्षा स्थान, दुर्ग अथवा शरणागार छन्, त्यहाँ-त्यहाँ उनको ताकमा (घातमा) रह । यहाँसम्मकि तिम्रो आज्ञा बिना उनको लागि आवागमन सम्भव नरहोस् ।

[3]अर्थात् उनका विरुद्ध कुनै कारवाही नगरियोस् किनभने उनीहरू मुसलमान भइहालेका छन् । अर्थात् इस्लाम स्वीकार गरे पश्चात नमाज़ निरन्तर पढ्नु तथा ज़कात दिनु अनिवार्य छ, यदि कुनै व्यक्ति यिनीमध्ये कुनै एउटा कर्तव्य छाडिदिन्छ भने, त्यो मुसलमान ठानिने छैन । जुनप्रकार आदरणीय अबू बक्र (رضى الله عنه) ले जका़त नतिर्नेहरुका विरुद्ध यसै आयतबाट अर्थ प्रमाणित पाउनु भयो तथा भन्नुभयो :

(واللهِ لأُقاتِلَنَّ مَنْ فَرَّقَ بَيْنَ الصَّلٰوةِ وَالزَّكَاةِ)

"अल्लाहको सौगन्ध छ म उनीहरूसित अवश्य लड्नेछु जो नमाज़ तथा जका़तका मध्य अन्तर गर्नेछन् अर्थात नमाज़ पढ्छन् परन्तु ज़कात तिर्नबाट टाढा भाग्छन् ।" (बुख़ारी र मुस्लिम बहवाला मिशकात किताबुज़ ज़कात फ़सले सालिस)

[4]यस आयतमा उपरोक्त विरोधी मूर्तिपूजकहरूका सम्बन्धमा एक छूट प्रदान गरिएको छ कि यदि कुनै मूर्तिपूजक शरण माँगदछ भने उसलाई शरण प्रदान गर अर्थात् त्यसलाई आफ्नो सुरक्षामा सुरक्षित राख ताकि कुनै अन्य मुसलमानले त्यसलाई मार्न नसकोस् । ताकि उसलाई अल्लाहका कुरा सुन्न तथा इस्लाम

ذٰلِكَ بِاَنَّهُمْ قَوْمٌ لَّا يَعْلَمُوْنَ ۝٦

कारण कि उनीहरु अज्ञानी छन् ।[1]

كَيْفَ يَكُوْنُ لِلْمُشْرِكِيْنَ عَهْدٌ عِنْدَ اللّٰهِ وَعِنْدَ رَسُوْلِهٖٓ اِلَّا الَّذِيْنَ عٰهَدْتُّمْ عِنْدَ الْمَسْجِدِ الْحَرَامِ ۚ فَمَا اسْتَقَامُوْا لَكُمْ فَاسْتَقِيْمُوْا لَهُمْ ۗ اِنَّ اللّٰهَ يُحِبُّ الْمُتَّقِيْنَ ۝٧

(७) मुश्रिकहरूको कुनै सन्धिको कुनै जिम्मेवारी अल्लाह र त्यसका रसूलमा कसरी बाँकी रहन सक्छ ? उनीहरूको कुरा यसबाट अलग्ग छ, जोसित तिमीले मस्जिदे हराम (काबा) को पासमा सन्धि गरेका छौ ।[2] तसर्थ जबसम्म उनीहरू तिमीसित सन्धिको निर्वाह गर्दछन्, तिमीपनि उनीसित वचनको निर्वाह गर । अल्लाह (तआ़ला) संयमीहरूसित प्रेम गर्दछ ।[3]

كَيْفَ وَاِنْ يَّظْهَرُوْا عَلَيْكُمْ لَا يَرْقُبُوْا فِيْكُمْ اِلًّا وَّلَا ذِمَّةً ۭ

(८) उनीहरूका वचनको के भरोसा, उनीहरूलाई यदि तिमीमाथि प्रभुत्व प्राप्त हुन्छ भने न त सम्बन्धको विचार गर्छन् न सन्धि वचनको ।[4] आफ्ना

---

धर्म स्वीकार गर्नुको सौभाग्य प्राप्त होस् । परन्तु यदि अल्लाहका कुरा सुने पश्चात पनि त्यो इस्लाम धर्म स्वीकार गर्दैन भने त्यसलाई त्यसको सुरक्षित ठाउँमा पुऱ्याइदेउ । अर्थात् आफ्नो सुरक्षाको कर्तव्य अन्तिम क्षणसम्म निर्वाह गर्नुछ । जबसम्म त्यो आफ्नो सुरक्षित ठाउँमा पुग्दैन, त्यसको सुरक्षाको दायित्व तिमीमाथि छ ।

[1]अर्थात् शरणार्थीहरूको शरणको छुट यसकारण प्रदान गरिएको छ किनभने यिनीहरू अज्ञानी छन् । सम्भव छ अल्लाह तथा त्यसका रसूलका कुरा उनको ज्ञानमा आओस् तथा मुसलमानहरूको आचरण तथा व्यवहार उनीहरूले देख्छन् भने इस्लाम धर्म स्वीकार गरी परलोकको यातनाबाट बचून् । जुनप्रकार हुदैबियाको सन्धि पश्चात धेरैजसो काफ़िर मदीना आवत-जावत गरिरहे, त मुसलमानहरूका व्यवहार तथा आचरण देखेर इस्लाम धर्मलाई बुझ्नमा धेरै सहायता प्राप्त भयो तथा धेरैजसो मानिसहरू मुसलमान भए ।

[2]यो नकारात्मक प्रश्न हो, अर्थात् जुन मूर्तिपूजकहरुसित तिम्रो सन्धि छ, तिनका अतिरिक्त अब कसैसित सन्धि शेष रहेको छैन ।

[3]अर्थात् वचन निर्वाह गर्नु, अल्लाहको समक्ष प्रिय कुरो हो । यसकारण सम्बन्धमा सावधानी आवश्यक छ ।

[4](كَيْفَ) (कैफ़) को अर्थ हो 'कसरी' यो प्रश्न पनि अस्वीकृतिलाई जोड दिनको निम्ति प्रयोग भएको छ (اِلٌّ) (इल्ल) को अर्थ नाता (सम्बन्ध) तथा (ذِمَّةٌ) (जिम्मः) को अर्थ वचन हुन् अर्थात् ती मूर्तिपूजकहरूका कुराको के भरोसा जबकि उनको दशा यो छ कि यदि यिनीहरू तिमीमाथि विजयी हुन्छन् भने कुनै सम्बन्ध

يُرْضُوْنَكُمْ بِأَفْوَاهِهِمْ وَتَأْبٰى قُلُوْبُهُمْ ۚ وَأَكْثَرُهُمْ فٰسِقُوْنَ ﴿٨﴾

मुखले यिनीहरू तिमीलाई ठीक्क (प्रसन्न) पारिराखेका छन् परन्तु यिनका हृदय मान्दैनन् र उनीहरूमा अधिकतर (दुराचारी) फ़ासिक़ छन्।

اِشْتَرَوْا بِاٰيٰتِ اللّٰهِ ثَمَنًا قَلِيْلًا فَصَدُّوْا عَنْ سَبِيْلِهٖ ۚ اِنَّهُمْ سَآءَ مَا كَانُوْا يَعْمَلُوْنَ ﴿٩﴾

(९) उनीहरूले अल्लाहका आयतहरुलाई अति कम मुल्यमा बेचिदिए तथा उसको मार्गबाट रोके। अत्याधिक नराम्रो छ, जुन कुरा यिनीहरूले गरिराखेका छन्।

لَا يَرْقُبُوْنَ فِيْ مُؤْمِنٍ اِلًّا وَّلَا ذِمَّةً ۚ وَاُولٰٓئِكَ هُمُ الْمُعْتَدُوْنَ ﴿١٠﴾

(१०) यिनीहरू त कुनै मुसलमानको पक्षमा कुनै सम्बन्धको अथवा सन्धिको कदापि चिन्ता गर्दैनन्, यी त छन् नै अतिक्रणकारी।[1]

فَاِنْ تَابُوْا وَاَقَامُوا الصَّلٰوةَ وَاٰتَوُا الزَّكٰوةَ فَاِخْوَانُكُمْ فِي الدِّيْنِ ۗ وَنُفَصِّلُ الْاٰيٰتِ لِقَوْمٍ

(११) अब पनि यदि यिनी क्षमा-याचना (पश्चाताप) गर्दछन् तथा नमाज़ निरन्तर पढ्छन् तथा ज़कात दिइराख्छन् भने तिम्रा धर्म भाई हुन्।[2]

---

अथवा वचनको चिन्ता गर्ने छैनन्। केही व्याख्याकारहरूको मत छ कि प्रथम कैफको अर्थ मूर्तिपूजक तथा द्वितीयको अर्थ यहूदी हुन् किनभने उनको विशेषता वर्णन गरिएको छ कि उनी अल्लाहका आयतलाई तुच्छ मूल्यमा विक्रय गरिदिन्छन्। तथा यो दुर्गुण यहूदीहरुकै रहिआएको छ।

[1]पटक-पटक स्पष्टीकरणको उद्देश्य मूर्तिपूजक तथा यहूदीहरूको इस्लाम धर्मसित शत्रुता तथा उनका हृदयमा बसेका द्वेष भावहरुलाई प्रदर्शित गर्नु हो।

[2]नमाज़, तौहीद (एकेश्वरवाद) तथा रिसालतलाई स्वीकार गरेपश्चात, इस्लामको सबभन्दा श्रेष्ठ तथा विशेष मूल स्तम्भ हो, जुन अल्लाहको अधिकार हो, त्यसमा अल्लाहको उपासनाका विभिन्न रूप छन्। यसमा हात बाँधेर उभिनु हो, दण्डवत् तथा टाउको टेक्नु हो, प्रार्थना तथा अर्चना हो, अल्लाहको श्रेष्ठता तथा प्रतापको तथा आफ्नो निर्बलता तथा विवशताको प्रदर्शन हो। उपासनाका यी सम्पूर्ण विधिहरु तथा रूपमात्र अल्लाहको लागि उचित छन्। नमाज़ पश्चात द्वितीय कर्तव्य ज़कात तिर्नु हो जसमा बन्दनीय पथ हुनुका साथ-साथ अरु मनुष्यहरुप्रति उनका मौलिक अधिकार पनि सम्मिलित छन्। ज़कातबाट समाज तथा त्यसका जातिका निर्धन, अनाथ, अपाङ्ग, असहाय मानिसहरू लाभ प्राप्त गर्दछन्। यसैकारण रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका कथनहरुमा पनि तौहीदको गवाही (साक्ष्य) दिनु पश्चात तिनै दुईटा कुराहरुलाई अधिक स्पष्ट रूप एवं विशेषताले वर्णित गरिएको छ। नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "मलाई आदेश दिइएको छ कि म मानिसहरूसित युद्ध गरुँ, यहाँसम्मकि उनीहरू यस कुराको

يَّعْلَمُوْنَ ⑪

हामी त जानकारहरुका लागि आफ्ना आयतहरूलाई सविस्तार वर्णन गरिराखेका छौं।

وَإِنْ نَّكَثُوْٓا اَيْمَانَهُمْ مِّنْۢ بَعْدِ عَهْدِهِمْ وَطَعَنُوْا فِيْ دِيْنِكُمْ فَقَاتِلُوْٓا اَئِمَّةَ الْكُفْرِ ۙ اِنَّهُمْ لَآ اَيْمَانَ لَهُمْ لَعَلَّهُمْ يَنْتَهُوْنَ ⑫

(१२) यदि यिनीहरू प्रतिज्ञा तथा वचन दिए पश्चात पनि आफ्नो प्रतिज्ञा भङ्ग गर्दछन् तथा तिम्रो धर्मको निन्दा गर्छन् भने तिमी पनि ती अधर्मीहरूका प्रमुखहरुसित युद्ध गर। उनीहरूको सौगन्ध कुनै वस्तु होइन, सम्भव छ कि यसप्रकार उनी रोकिऊन्।[1]

اَلَا تُقَاتِلُوْنَ قَوْمًا نَّكَثُوْٓا اَيْمَانَهُمْ وَهَمُّوْا بِاِخْرَاجِ الرَّسُوْلِ وَهُمْ بَدَءُوْكُمْ اَوَّلَ

(१३) तिमीहरू उनीहरूका टाउका कुल्चिन किन तयार हुँदैनौं[2] जसले आफ्ना प्रतिज्ञालाई तोडिदिए तथा (अन्तिम)

गवाही (साक्ष्य) देऊन् कि अल्लाहको अतिरिक्त कोही पूज्य छैन तथा मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) अल्लाहका सन्देशवाहक हुन्। तथा नमाज़ स्थापित गर्दछन् तथा ज़कात दिन्छन्।" (सहीह बुख़ारी किताबुल ईमान बाब फइन ताबू व अकामुस्सलात, र मुस्लिम किताबुल ईमान बाबुल अमरे बिकितालिन्नास.......) आदरणीय अब्दुल्लाह बिन मसऊदको कथन छ (وَمَنْ لَّمْ يُزَكِّ فَلَا صَلَاةَ لَهُ) 'जसले ज़कात दिएन, उसको नमाज़ पनि हुँदैन।'

[1](أيمان) (ऐमान) (यमीन) को बहुवचन हो, जसको अर्थ 'सौगन्ध हो'। (أئمه) (अइम्मा) (إمام) (इमाम) को बहुवचन हो। भाव मुखिया, नेता हो। अर्थ यो हो कि यदि यिनीहरू वचन तोड्छन्, तथा धर्मलाई कलंकित गर्न प्रयत्न गर्दछन्, त प्रत्यक्ष रूपले यिनीहरू सौगन्ध (कसम) पनि खाऊन त उनको कुनै भरोसा छैन। काफ़िरहरूका यी नेताहरुसित युद्ध गर। सम्भव छ कि उनीहरू यसप्रकार आफ्नो कुफ्रबाट रोकिऊन्। यसबाट केही मानिसहरूले यो अर्थ निकालेका छन् कि यदि इस्लामी राज्यमा निवास बस्ने व्यक्ति मुसलमानहरूका अतिरिक्त अन्य धर्मको अनुयायी यदि वचन अथवा सन्धिलाई तोड्दैन तर केवल इस्लाम धर्मलाई कलंकित गर्दछ भने उसलाई वध गरिने छैन किनभने कुर्आनले उनीहरूसित युद्ध गर्नको लागि दुईकुरा वर्णित गरेको छ,, यसकारण जबसम्म दुबै कुरालाई उनीहरू गर्ने छैनन् उनीहरु वध गरिनुका अधिकारी हुने छैनन् परन्तु इमाम शाफई तथा अन्य इमामहरुको मत छ कि धर्मलाई कलंकित गर्नुको प्रयत्न नै वचन तोड्नु समान हो यसकारण उनीहरूका निकट ती दुबै कुरा आउँछन्, अतः यस शरणार्थीको वध उचित छ। (फ़तहुल क़दीर)

[2](ألا) को प्रयोग उत्तेजित गर्नको लागि गरिन्छ, अल्लाह तआला मुसलमानहरूलाई धर्मयुद्धको लागि प्रलोभन दिइराखेको छ।

مَرَّةٍ ۭ اَتَخْشَوْنَهُمْ ۚ فَاللّٰهُ اَحَقُّ اَنْ تَخْشَوْهُ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ⑬

ईशदूतलाई देशबाट निकालिदिने विचारमा छन् ।[1] तथा स्वयं नै प्रथम पटक उनीहरूले तिमीसित निहु खोज्न पहल गरे ।[2] के तिमी उनीसित तर्सन्छौ ? अल्लाहलाई नै सबभन्दा अधिक अधिकार छ कि तिमी उसित तर्स यदि तिमी ईमान भएका हौ ।

قَاتِلُوْهُمْ يُعَذِّبْهُمُ اللّٰهُ بِاَيْدِيْكُمْ وَيُخْزِهِمْ وَيَنْصُرْكُمْ عَلَيْهِمْ وَيَشْفِ صُدُوْرَ قَوْمٍ مُّؤْمِنِيْنَ ⑭ۙ

(१४) उनीहरूसँग तिमी युद्ध गर, अल्लाह तआला तिम्रा हातद्वारा उनीहरूलाई यातना दिनेछ, उनीहरूलाई अपमानित तथा निरादार गर्नेछ, तिमीलाई उनका विरुद्ध सहायता दिनेछ तथा मुसलमानहरुका हृदयको दुखमोचन गर्नेछ ।

وَيُذْهِبْ غَيْظَ قُلُوْبِهِمْ ۭ وَيَتُوْبُ اللّٰهُ عَلٰي مَنْ يَّشَاۗءُ ۭ

(१५) तथा तिनका हृदयका दुख तथा क्रोधलाई समाप्त गर्नेछ ।[3] तथा त्यो जसलाई चाहन्छ

---

[1]यसबाट तात्पर्य दारुननदवा हो जसमा मक्काका प्रमुखहरुले नबी सल्लल्लाहु अलैहि वसल्लमलाई देश निकाला गर्ने, बन्दी बनाउने अथवा हत्या गर्ने प्रस्तावमाथि विचार गरे ।

[2]यसबाट तात्पर्य बद्रका युद्धमा मक्काका मूर्तिपूजकहरूको व्यवहार हो कि उनीहरू आफ्ना व्यापारिक क़ाफिला (समूह) को सुरक्षाका लागि गए । परन्तु यस पश्चात उनीहरूले देखे कि क़ाफ़िला बचेर निस्किसकेको छ, उनीहरू बद्रको स्थानमा मुसलमानहरुसित लड्नुको तयारी तथा छेडछाड गरिरहे, जसको परिणाम स्वरुप अन्त्यमा युद्ध भएर नै रहयो । अथवा यसबाट तात्पर्य क़बीला बनी बक्रको त्यो सहायता हो जुनकि कुरैशले उनीहरूको लागि गरे, जबकि उनीहरूले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसँग सन्धि गरिएको क़बीलामाथि चढाई गरेका थिए, जबकि कुरैशको यो सहायता सन्धिको विरुद्ध थियो ।

[3]अर्थात् जब यी मुसलमान कमजोर थिए, त्यतिखेर यी मूर्तिपूजक उनीमाथि अत्याचार गर्दथे, जसको कारण मुसलमानहरुका हृदय उनीबाट अत्याधिक दुखी तथा उत्पीडित थिए । जब मुसलमानहरुको हातबाट उनीहरू मारिनेछन् तथा अनादर तथा अपमान उनको भाग्यमा आउने छ, त्यसबेला प्राकृतिक कुरो हो कि यसबाट उत्पीडित एवं दुखी मुसलमानहरूका हृदयलाई शीतलता प्राप्त हुनेछ तथा मानसिक क्रोधको निवारण हुनेछ ।

وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ﴿١٥﴾

दयाले आकर्षित हुन्छ, तथा अल्लाह तआ़ला सर्वज्ञाता, तत्वदर्शी छ ।

اَمْ حَسِبْتُمْ اَنْ تُتْرَكُوْا وَلَمَّا يَعْلَمِ اللّٰهُ الَّذِيْنَ جٰهَدُوْا مِنْكُمْ وَلَمْ يَتَّخِذُوْا مِنْ دُوْنِ اللّٰهِ وَلَا رَسُوْلِهٖ وَلَا الْمُؤْمِنِيْنَ وَلِيْجَةً ؕ وَاللّٰهُ خَبِيْرٌۢ بِمَا تَعْمَلُوْنَ ﴿١٦﴾

(१६) के तिमीले यो ठानेका छौ कि तिमी छाडिदिइने छौ यद्यपि कि अल्लाह (तआ़ला) ले तिमीमध्ये उनीहरूलाई श्रेष्ठ बनाएको छैन जो धर्मयुद्धका सैनिक हुन् ।[२] तथा जसले अल्लाह तथा त्यसका रसूल एवं ईमान भएकाहरूका अतिरिक्त कसैलाई मित्र बनाएनन् ?[३] र अल्लाह (तआ़ला) राम्ररी जान्दछ, जुन तिमी गरिराखेका छौ ।[४]

مَا كَانَ لِلْمُشْرِكِيْنَ اَنْ يَّعْمُرُوْا مَسٰجِدَ اللّٰهِ شٰهِدِيْنَ عَلٰۤى اَنْفُسِهِمْ بِالْكُفْرِ ؕ اُولٰٓئِكَ حَبِطَتْ

(१७) असम्भव छ कि मूर्तिपूजक अल्लाहको मस्जिदलाई आबाद गरुन्, जबकि दशा यो छ कि यिनीहरू आफ्ना विश्वासका स्वयं साक्षी छन् ।[५]

---

[१]अर्थात् बिना कुनै परीक्षाको ।

[२]जस्तो कि धर्मयुद्धद्वारा परीक्षा लिइयो ।

[३](وَلِيجة) (वलीजः) घनिष्ट तथा हार्दिक मित्रलाई भन्दछन् किनकि मुसलमानहरुलाई अल्लाह तथा त्यसका रसूल (सल्लल्लाहु अलैहि वसल्लम) का शत्रुहरुसित प्रेम गर्नु तथा मित्रतापूर्ण सम्बन्धबाट पनि रोकिएको थियो, अतः यो पनि परीक्षाको एउटा साधन थियो, जसबाट निःस्वार्थी ईमान भएकाहरुलाई अरुहरूबाट अलग्ग गरियो ।

[४]अर्थ यो हो कि अल्लाहलाई त पहिले नै हर वस्तुको ज्ञान छ, परन्तु धर्मयुद्धमा बुद्धिमत्ता यो हो कि यसबाट स्वार्थी तथा निःस्वार्थी आज्ञाकारी तथा अवज्ञाकारी भक्त स्पष्ट हुन्छन्, जसलाई प्रत्येक व्यक्ति देख्न तथा चिन्न सक्तछ ।

[५](مساجد الله) सित तात्पर्य मस्जिदे हराम हो । बहुवचन शब्द यसकारण प्रयोग गरिएको छ कि संसारका सबै मस्जिदहरुको यो केन्द्र (क़िबला) हो । अथवा अरबहरुमा एक-वचनको लागि बहुवचनको प्रयोग पनि उचित भनिन्छ । अर्थ यो हो कि अल्लाहको घर (अर्थात मस्जिदे हराम) को निर्माण गर्नु अथवा बसाउनु मुसलमानहरुको काम हो, न कि उनको जो कुफ्र तथा शिर्क गर्दछन् तथा उसलाई स्वीकार पनि गर्दछन्, जस्तो कि उनका तलबिया (धर्मघोष) मा भन्ने गर्दथे । (لَبَّيكَ لا شريكَ لكَ ، إلّا شريكاً هُوَ لكَ ، تَملِكُهُ وما مَلَكَ)

أَعْمَالُهُمْ ۚ وَفِي النَّارِ هُمْ خَالِدُونَ ⑰

उनका कर्महरू नष्ट तथा बेकार छन्, तथा उनीहरू स्थायी रूपले नरकवासी हुन् ।[1]

إِنَّمَا يَعْمُرُ مَسَاجِدَ اللَّهِ مَنْ آمَنَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَأَقَامَ الصَّلَاةَ وَآتَى الزَّكَاةَ وَلَمْ يَخْشَ إِلَّا اللَّهَ ۖ فَعَسَىٰ أُولَٰئِكَ أَنْ يَكُونُوا مِنَ الْمُهْتَدِينَ ⑱

(१८) अल्लाहका मस्जिदहरुलाई त उनीहरू आबाद गर्दछन्, जो अल्लाह तथा प्रलयका दिनमा ईमान राख्दछन् । नमाज़ निरन्तर पढ्दछन् ज़कात दिन्छन् र अल्लाहका अतिरिक्त कोहीसित तर्सन्नन् । अतः आशा छ तिनीहरू नै मार्गदर्शन प्राप्त हुनेछन् ।[2]

أَجَعَلْتُمْ سِقَايَةَ الْحَاجِّ وَعِمَارَةَ الْمَسْجِدِ الْحَرَامِ كَمَنْ آمَنَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَجَاهَدَ فِي سَبِيلِ اللَّهِ ۚ لَا يَسْتَوُونَ

(१९) के तिमीले हाजिहरुलाई पानी खुवाउनु तथा मस्जिदे हरामको सेवा गर्नु त्यस कुरा समान गरिदिएका छौ जसले अल्लाहमा तथा प्रलयका दिनमा विश्वास गरे तथा अल्लाहको मार्गमा धर्मयुद्ध गरे? यी अल्लाहका

(सहीह मुस्लिम बाबुत तलबीयः) अथवा यसबाट तात्पर्य त्यो स्वीकार्य हो जुन प्रत्येक धर्मावलम्बी गर्दछ कि म यहूदी, ईसाई, साबई अथवा मूर्तिपूजक हूँ । (फ़तहुल क़दीर)

[1]अर्थात् उनका ती कर्म जुन हेर्नमा पुण्य लाग्दछन्, जस्तो खाना-ए-काअबाको परिक्रमा, उमरा तथा हाजिहरुको सेवा आदि । परन्तु ईमान बिना तिनी यस्ता वृक्ष सरह छन् जुन छायाँ तथा फलविहीन छ अथवा उनीहरू ती फुलहरु समान छन् जसमा सुगन्ध छैन ।

[2]जुनप्रकार हदीसमा पनि छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

إِذَا رَأَيْتُمُ الرَّجُلَ يَعْتَادُ الْمَسْجِدَ، فَاشْهَدُوا لَهُ بِالْإِيمَانِ

"जब तिमी देख्छौ कि कोही मस्जिदमा नियमितरुपले आउँछ, त तिमी उसको ईमानको साक्षी बन ।" (तिर्मिजी तफ़सीर सुरः तौबः)

कुर्आन करीममा यहाँ पनि अल्लाहमा ईमान तथा आख़िरतमा ईमान पश्चात जुन कर्महरुको वर्णन गरिएको छ, त्यो नमाज़, ज़कात तथा अल्लाहसित तर्सनु हो जसबाट नमाज़, ज़कात तथा तक़्वा (अल्लाहसित भय) को महत्व प्रकाशित छ ।

निकट समान छैनन्[1] तथा अल्लाह (तआ़ला) अत्याचारीहरुलाई मार्ग देखाउँदैन ।[2]

عِنْدَ اللّٰهِ ۗ وَاللّٰهُ لَا يَهْدِي الْقَوْمَ الظّٰلِمِيْنَ ۞

[1]मूर्तिपूजकहरू हाजिहरूलाई पानी खुवाउने तथा मस्जिदे हरामको हेर चारको जुन कार्य गर्दथे, त्यसमाथि उनीहरूलाई ठूलो गर्व थियो तथा यसको सापेक्ष उनीहरू ईमान तथा धर्मयुद्धको कुनै विशेषता दिदैनथे, जसको विशेषता मुसलमानहरुमा थियो । अल्लाहले आदेश गर्‍यो के तिमी हाजिहरूलाई पानी खुवाउने तथा मस्जिदे हरामको प्रबन्ध गर्ने कुरोलाई अल्लाहमाथि ईमान तथा अल्लाहको मार्गमा धर्मयुद्धको समान ठान्दछौ ? याद राख अल्लाहका निकट यिनी समान छैनन् , बरु मूर्तिपूजकको कुनै पनि कर्म स्वीकार छैन चाहे त्यो पुण्यको रूपमा नै होस् जस्तो कि यसभन्दा पूर्वका आयतको वाक्य (حَبِطَتْ أَعْمَالُهُمْ) मा स्पष्ट गरिसकिएको छ । केही कथनहरुमा यसको अवतरणको कारण मुसलमानहरूको आपसको कुराकानी हो कि एकदिन केही मुसलमान मिम्बरे नबवीका निकट एकत्रित थिए, उनीहरूमध्ये एउटाले केही भन्यो कि इस्लाम स्वीकार गरे पश्चात मेरो निकट सबभन्दा श्रेष्ठ कर्म हाजिहरुलाई पानी खुवाउनु हो, दोस्रोले भन्यो मस्जिदे हराम आबाद गर्नु, तेस्रोले भन्यो बरु अल्लाहको मार्गमा धर्मयुद्ध गर्नु यी सबैभन्दा श्रेष्ठ छ, जुन तिमीले वर्णन गरेका छौ । आदरणीय उमर (رضی اللہ عنہ) ले जब उनीहरूको आपसमा यो कुरा गरिराखेको सुन्नुभयो त गाली गर्नुभयो तथा भन्नुभयो कि मिम्बरे रसूल सल्लल्लाहु अलैहि वसल्लमको निकट उच्च स्वर पारेर कुरा नगर । यो शुक्रवार को दिन थियो । यो हदीस भन्ने आदरणीय नौमान बिन बशीर (رضی اللہ عنہ) भन्नुहुन्छ कि म शुक्रवारको नमाज़ पश्चात नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भएँ तथा आफ्नो आपसका यस कुराकानीको विषयमा सोधें । त्यसपश्चात यो आयत उत्र्‍यो । (सहीह मुस्लिम किताबुल इमारः बाब फ़ज़लिल जिहाद फ़ी सबीलिल्लाह) जसमा जस्तो कि यो स्पष्ट गरिदिइएको छ कि अल्लाहमा ईमान, आख़िरतमा ईमान, तथा अल्लाहको मार्गमा धर्मयुद्ध सर्वश्रेष्ठ तथा विशेषता भएका कर्म हुन् । वार्तालापको माध्यमले वास्तविक विशेषता तथा श्रेष्ठता त धर्मयुद्धको वर्णन गर्नु थियो तर अल्लाहमा ईमान नभईकन कुनै प्रकारका कर्म स्वीकार गरिदैनन्, यसकारण सर्वप्रथम अल्लाहमा ईमानको वर्णन गरियो । अतः यसबाट यो ज्ञात भयो कि यसको अवतरणको कारण केवल मूर्तिपूजकहरुका कुकर्महरुका कारण नै मात्र होइन, बरु यसको अतिरिक्त स्वयं मुसलमानहरूको आ-आफ्नोतिरबाट कुनै कर्मलाई कुनै कर्ममाथि अधिक श्रेष्ठता दिनुको कारण थियो, जबकि यो काम शरीअतवाला अर्थात ईशदूतको हो न कि मुसलमानहरुको । मुसलमानहरूको कार्य त प्रत्येक त्यस कुरा अनुसार कर्म गर्नु हो जुन अल्लाह तथा त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लम तिरबाट उनीहरूलाई बताइन्छन् ।

[2]अर्थात् यिनीहरू चाहे जस्तो पनि दाबी गरुन् वास्तवमा अत्याचारी हुन् अर्थात् मूर्तिपूजक हुन्, यसकारण कि शिर्क सबभन्दा ठूलो अत्याचार हो । यस अत्याचारका कारण नै उनीहरू अल्लाहको मार्गदर्शनबाट बञ्चित छन्, त्यसकारण उनको

ٱلَّذِينَ ءَامَنُوا۟ وَهَاجَرُوا۟ وَجَٰهَدُوا۟ فِى سَبِيلِ ٱللَّهِ بِأَمْوَٰلِهِمْ وَأَنفُسِهِمْ أَعْظَمُ دَرَجَةً عِندَ ٱللَّهِ ۚ وَأُو۟لَٰٓئِكَ هُمُ ٱلْفَآئِزُونَ ﴿٢٠﴾

(२०) जसले ईमान स्थापित गरे, हिज़रत गरे, अल्लाहको मार्गमा आफ्नो माल तथा आफ्नो प्राणले धर्मयुद्ध गरे, उनी अल्लाह समक्ष अत्याधिक सम्मानित छन्, तथा यिनै मानिसहरू सफलता प्राप्त गर्ने छन्।

يُبَشِّرُهُمْ رَبُّهُم بِرَحْمَةٍ مِّنْهُ وَرِضْوَٰنٍ وَجَنَّٰتٍ لَّهُمْ فِيهَا نَعِيمٌ مُّقِيمٌ ﴿٢١﴾

(२१) उनका पोषकले उनीहरूलाई आफ्नो कृपा एवं अनुग्रह तथा यस्ता स्वर्गहरुको शुभ-सूचना दिन्छ जसमा उनका लागि स्थायी सुख छ।

خَٰلِدِينَ فِيهَآ أَبَدًا ۚ إِنَّ ٱللَّهَ عِندَهُۥٓ أَجْرٌ عَظِيمٌ ﴿٢٢﴾

(२२) त्यहाँ यिनीहरू नित्य रहनेछन्, अल्लाहको पासमा निःसन्देह धेरै ठूला प्रतिफल छन्।[1]

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ لَا تَتَّخِذُوٓا۟ ءَابَآءَكُمْ وَإِخْوَٰنَكُمْ أَوْلِيَآءَ إِنِ ٱسْتَحَبُّوا۟ ٱلْكُفْرَ عَلَى ٱلْإِيمَٰنِ ۚ وَمَن يَتَوَلَّهُم مِّنكُمْ فَأُو۟لَٰٓئِكَ هُمُ ٱلظَّٰلِمُونَ ﴿٢٣﴾

(२३) हे निष्ठावानहरू ! आफ्ना पिताहरु र आफ्ना भाईहरूलाई मित्र न बनाऊ, यदि उनीहरू कुफ्रलाई इस्लामभन्दा अधिक प्रिय ठान्दछन्। तिमीहरुमध्ये जसले पनि उनीसित प्रेम राख्दछ, त्यो पूर्ण पापी अत्याचारी हो।[2]

तथा मुसलमानहरुको जसलाई अल्लाहको मार्गदर्शन प्राप्त छ, आपसमा कुनै तुलना छैन।

[1]यी आयतहरुमा ती ईमान भएकाको प्रधानताको चर्चा गरिएको छ जसले प्रवास गरे तथा आफ्नो तन, मन र धनले धर्मयुद्धमा भाग लिए। तथा भन्नुभयो कि अल्लाहकहाँ उनीहरूकै पद श्रेष्ठ छ तथा यिनै सफल छन्, यिनी अल्लाहको कृपा तथा प्रसन्नता एवं स्थाई पुरस्कारका पात्र हुन्, न कि उनीहरू जो स्वयं आफूलाई श्रेष्ठ ठान्दछन्, आफ्नो मुखले आफूलाई ठूलो भन्दछन् तथा आफ्ना पूर्वजहरुका तथा पूर्वजका रीति रिवाजलाई अल्लाहमा ईमानको तुलनामा प्रिय ठान्दछन्।

[2]यो त्यही विषय हो, जसको पवित्र कुर्आनमा विभिन्न स्थानहरुमा चर्चा गरिएको छ। (हेर्नुस् सूरः आले इमरान आयत-२८ देखि ११८ सम्म, सूरः मायदः आयत ५१ तथा सुरः मुजादिलः-२२) यहाँ धर्मयुद्ध तथा देश त्यागको विषयमा यसको विशेषता स्पष्ट छ, यसकारण यसको वर्णन यहाँपनि छ। अर्थात् धर्मयुद्ध तथा हिज़रतमा तिम्रा पिता तथा भाईहरुको प्रेम बीचमा नआओस्, किनभने यदि उनीहरू अहिले पनि काफ़िर छन्,

قُلْ إِن كَانَ آبَاؤُكُمْ وَأَبْنَاؤُكُمْ وَإِخْوَانُكُمْ وَأَزْوَاجُكُمْ وَعَشِيرَتُكُمْ وَأَمْوَالٌ اقْتَرَفْتُمُوهَا وَتِجَارَةٌ تَخْشَوْنَ كَسَادَهَا وَمَسَاكِنُ تَرْضَوْنَهَا أَحَبَّ إِلَيْكُم مِّنَ اللَّهِ وَرَسُولِهِ وَجِهَادٍ فِي سَبِيلِهِ فَتَرَبَّصُوا حَتَّىٰ يَأْتِيَ اللَّهُ بِأَمْرِهِ ۗ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الْفَاسِقِينَ ﴿٢٤﴾

(२४) (तपाईं) भनिदिनुस् कि यदि तिम्रा पिता तथा तिम्रा पुत्र एवं तिम्रा भाई तथा तिम्रा पत्नीहरू तथा तिम्रा वंश तथा अर्जित धन तथा त्यो व्यापार जसको कमीबाट तिमी तर्सन्छौ तथा ती आवास जसलाई तिमी प्रिय ठान्दछौ, (यदि) यी तिमीलाई अल्लाह एवं त्यसको रसूल तथा अल्लाहको मार्गमा धर्मयुद्धभन्दा प्रिय छन्, भने तिमी प्रतिक्षा गर त्यस बेलासम्म जबकि अल्लाह तआला आफ्ना यातनालाई ल्याओस् । अल्लाह तआला भ्रष्टाचारीहरुलाई मार्ग देखाउँदैन ।[1]

त तिम्रा मित्र हुन सक्दैनन्, बरु उनी तिम्रा शत्रु हुन् । यदि तिमी उनीसित प्रेमपूर्ण सम्बन्ध राख्दछौ भने याद राख तिमी पनि अत्याचारी भनिनेछौ ।

[1]यस आयतमा पनि विगत विषयलाई बडो प्रवल रूपले वर्णन गरिएको छ। (عشيرة) बहुवचन संज्ञा हो त्यो निकटतम् सम्बन्धी जोसँग मनुष्य दैनिक जीवन व्यतीत गर्दछ अर्थात् परिवार, वंश। (تجارة) (तेजारत) कमाईको अर्थको लागि आउँछ। (اقتراف) (इकतेराफ़) व्यापारका क्रय-विक्रयलाई भन्दछन् जसको उद्देश्य लाभको प्राप्ति हुन्छ। (كساد) (कसाद) मन्दीलाई भन्दछन् अर्थात् बिक्रीका वस्तुको समय गइसकेको होस्, जसको कारण मानिसहरूलाई त्यसको आवश्यकता नहोस्। दुबै परिस्थितिहरु मन्दीका हुन्। (مساكن) (मसाकिन) मस्कनको बहुवचन हो। यसबाट तात्पर्य ती घर हुन् जसमा निवास गरी मनुष्य ऋतुहरुको तीव्रता तथा घटनाबाट बच्न सम्मानपूर्वक रहन-सहन तथा आफ्नो परिवारको सुरक्षाको लागि निर्माण गर्दछ, यी सबै कुराहरु आ-आफ्ना स्थानमा आवश्यक तथा मनुष्यलाई यी सबै कुराहरुसित हार्दिक प्रेम एउटा प्राकृतिक कुरा हो। (जुन निन्दनीय छैन) तर यदि यो प्रेम अल्लाह तथा त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लमको प्रेमभन्दा अधिक तथा अल्लाहको मार्गमा धर्मयुद्ध गर्नमा बाधा बन्छ भने यो कुरो अल्लाहलाई अति अप्रिय छ। तथा त्यसको अप्रसन्नताको कारण बन्दछ तथा त्यो त्यस्तो अवज्ञा तथा अवहेलना हो जसको कारण मनुष्य अल्लाहको मार्गदर्शनबाट बञ्चित हुनसक्छ । जुनप्रकार कि अन्तिम शब्दहरुमा चेतावनी स्पष्ट भएर आउँछ । हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि यस विषयलाई बडो स्पष्ट शब्दहरुमा वर्णन गर्नुभएको छ। जस्तो एक अवसरमा आदरणीय

(२५) निःसन्देह अल्लाह तआलाले तिमीलाई धेरैजसो रणक्षेत्रहरुमा विजय प्रदान गरेको छ । तथा हुनैनका युद्धका दिन पनि, जबकि तिमीलाई आफ्ना अधिक संख्यामाथि गर्व थियो, परन्तु यसले तिमीलाई कुनै लाभ पुऱ्याएन, बरु धर्ती आफ्नो विस्तारका उपरान्त पनि तिम्रो लागि संकीर्ण भयो, अनि तिमी पिठ्यूँ फर्काइ गइहाल्यौ ।

لَقَدْ نَصَرَكُمُ اللّٰهُ فِيْ مَوَاطِنَ كَثِيْرَةٍ ۙ وَّيَوْمَ حُنَيْنٍ ۙ اِذْ اَعْجَبَتْكُمْ كَثْرَتُكُمْ فَلَمْ تُغْنِ عَنْكُمْ شَيْـًٔا وَّضَاقَتْ عَلَيْكُمُ الْاَرْضُ بِمَا رَحُبَتْ ثُمَّ وَلَّيْتُمْ مُّدْبِرِيْنَ ﴿۲۵﴾

(२६) त्यसपछि अल्लाहले आफ्नो तर्फबाट शान्ति आफ्नो नबीमाथि तथा निष्ठावानहरुमाथि अवतरित गऱ्यो तथा आफ्नो त्यो सेना पठायो, जसलाई तिमीले देखिराखेका थिएनौं तथा काफ़िरहरुलाई पूरा दण्ड दियो । र यी काफ़िरहरुको यही प्रतिफल थियो ।

ثُمَّ اَنْزَلَ اللّٰهُ سَكِيْنَتَهٗ عَلٰى رَسُوْلِهٖ وَعَلَى الْمُؤْمِنِيْنَ وَاَنْزَلَ جُنُوْدًا لَّمْ تَرَوْهَا ۚ وَعَذَّبَ الَّذِيْنَ كَفَرُوْا ؕ وَذٰلِكَ جَزَآءُ الْكٰفِرِيْنَ ﴿۲۶﴾

उमर (رضی اللہ عنہ) ले भन्नुभयो, “हे रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम ! तपाईं मलाई आफूबाहेक, प्रत्येक वस्तुभन्दा अधिक प्रिय हुनुहुन्छ ।” उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, “जबसम्म म उसको आफ्नै ज्यानभन्दा अधिक प्रिय हुन्न, त्यसबेलासम्म त्यो ईमानवाला होइन ।” आदरणीय उमर (رضی اللہ عنہ) ले भन्नुभयो, “परन्तु अब अल्लाहको सौगन्ध तपाईं मलाई आफ्नो ज्यानभन्दा पनि अधिक प्रिय हुनुहुन्छ ।” उहाँ सल्लल्लाह अलैहि वसल्लमले भन्नुभयो, “हे उमर ! अब तिमी मोमिन हौ ।” (सहीह बुख़ारी किताबुल ऐमान वन्नुजुर बाब कैफ़ कान यमिनुन्नबी सल्लल्लाहु अलैहि वसल्लम) एक अन्य कथनमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, “सौगन्ध छ त्यस अस्तित्वको जसका हातमा मेरो प्राण छ, तिमीमध्ये कोही व्यक्ति त्यस समयसम्म मुसलमान होइन, जबसम्म म उसको पिताभन्दा, उसको सन्तानभन्दा तथा सबैभन्दा अधिक प्रिय हुन्न ।” (सहीह बुख़ारी किताबुल ईमान बाब हुब्बिर्रसूल सल्लल्लाहु अलैहि वसल्लम मिनल ईमान, तथा मुस्लिम किताबुल ईमान) तथा एउटा अन्य हदीस (ईशदूतको कथन) मा धर्मयुद्धको महत्वको चर्चा गर्दै उहाँले भन्नुभयो कि जब तिमी निश्चित समयको लागि वस्तु उधारो दिएर त्यसलाई कम मुल्यमा क्रय गर्नु आफ्नो व्यवहार बनाउनेछौ तथा गोरुहरूका पुच्छर समाति खेती गर्नुमा प्रसन्न एवं सन्तुष्ट हुनेछौ तथा धर्मयुद्ध छाडिहाल्नेछौ त अल्लाह तिमीमाथि यस्तो अपमान आच्छादित गरिदिनेछ जसबाट तिमी त्यसबेलासम्म निस्कन सक्ने छैनौ जबसम्म आफ्नो धर्मतिर फर्कने छैनौ । (अबू दाऊद, किताबुल बयूअ बाबुन्नहय अनिल इनः मुसनद अहमद, भाग २, पृष्ठ ४२)

(२७) अनि त्यस पश्चात पनि जसलाई चाहन्छ अल्लाह (तआ़ला) क्षमा गर्दछ ।[1] अल्लाह नै क्षमावान् तथा कृपालु छ ।

ثُمَّ يَتُوبُ ٱللَّهُ مِنۢ بَعۡدِ ذَٰلِكَ عَلَىٰ مَن يَشَآءُۗ وَٱللَّهُ غَفُورٞ رَّحِيمٞ ٢٧

[1]हुनैन मक्का तथा तायफ नगरहरुका मध्यमा एउटा घाटी (बेंसी) को नाम हो। यहाँ हवाज़िन तथा सक़ीफका दुई क़बीला (समूह) बस्दथे, जो आफ्ना धनुष विद्यामा प्रसिद्ध थिए। यिनी मुसलमानहरुका विरुद्ध लड्न तयारी गरिराखेका थिए, त्यतिखेर यसको सूचना रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई प्राप्त भयो त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले बाह्र हजार मुसलमानहरुको सेना लिएर यी कबीलाहरुका विरुद्ध युद्ध गर्नको लागि हुनैनको घाटीमा जानुभयो, यो मक्का विजयको १८ अथवा १९ दिनका पश्चात शव्वालको घटना हो। उपरोक्त वर्णित क़बीलाले पूर्ण तयारी गरिसकेको थियो तथा विभिन्न सुरक्षित स्थानहरुमा बाण चलाउनेहरुलाई निर्धारित गरिदिएको थियो । यता मुसलमानहरुमा पनि यो भावना उत्पन्न भइसकेको थियो कि आज जे होस् अति संख्याको कारण हामी पराजित हुनेछैनौ । अर्थात् अल्लाह तआ़लाको सहायता बिना आफ्नो अधिक संख्यामा भरोसा अधिक भयो । अल्लाह तआ़लालाई यो गर्व तथा विचार प्रिय लागेन । परिणाम स्वरूप जब हवाज़िनका धनुषधारीहरुले विभिन्न स्थानहरुबाट मुसलमानहरुका सेनामाथि एक्कासि धनुष चलाउन प्रारम्भ गरिदिए त यो असम्भावित तथा बाँडहरुको प्रहारले मुसलमानहरु हतोत्साहित भई भागिहाले । रणभूमिमा केवल रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम तथा लगभग सय मुसलमान शेष रहे । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले मुसलमानहरुलाई पुकारीराख्नु भएको थियो,"अल्लाहका भक्तहरु ! मेरो पासमा आउ, म अल्लाहको रसूल हूँ ।" कहिले यो वाक्य पढ्दथे ( أنا النبي لا كذب أنا ابن عبدالمطلب ) अनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय अब्बास (رضي الله عنه) (जसको आवाज अति तीव्र थियो) लाई आदेश दिनुभयो कि मुसलमानहरुलाई एकत्रित गर्नको निम्ति आवाज देउन् । अतः उनको आवाज सुनेर मुसलमानहरु अति लज्जित भए अथवा पुनः मैदानमा आए तथा पुनः यसप्रकार दृढताले युद्ध गरे कि अल्लाहले विजय प्रदान गर्‍यो, अल्लाह तआ़लाको पनि सहायता यसप्रकार प्राप्त भयो कि एक त उनका हृदयलाई शान्ति भयो दोस्रो कुरो फरिश्ताहरु पनि अवतरित भए । यस युद्धमा मुसलमानहरुले ६ हजार काफ़िरहरुलाई बन्दी बनाए जसलाई पछि नबी सल्लल्लाहु अलैहि वसल्लमको भनाईमा छाडिदियो तथा निकै अधिक सामग्री युद्धमा प्राप्त भयो । युद्ध पश्चात उनका धेरैजसो नायकहरु पनि मुसलमान भए । यहाँ तीन आयतहरुमा अल्लाह तआ़लाले यस घटनालाई संक्षिप्त रूपले वर्णन गर्नुभएको छ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓاْ إِنَّمَا ٱلْمُشْرِكُونَ نَجَسٌ فَلَا يَقْرَبُواْ ٱلْمَسْجِدَ ٱلْحَرَامَ بَعْدَ عَامِهِمْ هَٰذَا ۚ وَإِنْ خِفْتُمْ عَيْلَةً فَسَوْفَ يُغْنِيكُمُ ٱللَّهُ مِن فَضْلِهِۦٓ إِن شَآءَ ۚ إِنَّ ٱللَّهَ عَلِيمٌ حَكِيمٌ ﴿٢٨﴾

(२८) हे मोमिनहरु! अवश्य नै मूर्तिपूजक अपवित्र छन्।[१] उनीहरू यस वर्ष पश्चात मस्जिदे हरामका निकट पनि आउन नपाऊन्।[२] यदि तिमीलाई निर्धनताको भय छ, भने अल्लाहले तिमीलाई आफ्नो कृपाले धनवान् बनाइदिनेछ यदि चाहन्छ।[३] निःसन्देह अल्लाह ज्ञानी तथा विवेकशील छ।

قَٰتِلُواْ ٱلَّذِينَ لَا يُؤْمِنُونَ بِٱللَّهِ وَلَا بِٱلْيَوْمِ ٱلْءَاخِرِ وَلَا يُحَرِّمُونَ

(२९) उनीहरूसित लड जो अल्लाहमा तथा प्रलयमा विश्वास गर्दैनन्, जो अल्लाह

[१]मूर्तिपूजकहरुको अपवित्र तथा अशुद्ध हुनुको तात्पर्य आस्था, विश्वास तथा कर्महरुको अपवित्रता हो। केही ज्ञाताहरूको निकट मूर्तिपूजक बाह्य तथा आन्तरिक दुवै रूपमा अपवित्र छन् किनभने उनीहरु शौच (सफाई, स्वच्छता तथा पवित्रता) को यसप्रकार प्रबन्ध गर्दैनन्, जसको आदेश धार्मिक नियमहरुले दिएका छन्।

[२]यो त्यही आदेश हो जुन ९ हिजरीमा मुक्तिको घोषणाको समय गरिएको थियो जसको विवरण अघि भइसकेको छ। यो निषेध केही विद्वानहरूका निकट मात्र मस्जिदे हरामको लागि हो। अन्यथा आवश्यकता अनुसार मूर्तिपूजक अन्य मस्जिदहरुमा प्रवेश गर्न सक्छन्। जुनप्रकार नबी सल्लल्लाहु अलैहि वसल्लमले सुमामा बिन उसाललाई मस्जिदे नबवीको एक स्तम्भसित बाँधेर राख्नुभएको थियो। तथा पछि अल्लाहले उनको हृदयमा इस्लाम तथा नबी सल्लल्लाह अलैहि वसल्लमको प्रेम हालिदियो तथा उनी मुसलमान भए। यसका अतिरिक्त अधिकतर आलिमहरुका निकट यहाँ मस्जिदे हरामसित तात्पर्य सम्पूर्ण हरम हो। अर्थात् हरमको सीमामा मूर्तिपूजकहरुको प्रवेश वर्जित छ। केही तत्वहरुको आधारमा आदेशबाट ती गैर मुस्लिम तथा सेवकहरुलाई जो मुस्लिम राज्यमा निवास गर्दछन् पृथक गरिएको छ। यसैप्रकार आदरणीय उमर बिन अब्दुल अज़ीज़ले यसबाट अर्थ निकाल्दै आफ्नो राज्यकालमा यहूदी तथा ईसाईहरुलाई पनि मस्जिदमा प्रवेशबाट निषेधाज्ञा लागू गर्नुभएको थियो। (इब्ने क़सीर)

[३]मूर्तिपूजकहरुलाई रोक्नुका उपरान्त केही मुसलमानहरुको हृदयमा यो विचार आयो कि हज़को अवसरमा जुन व्यापारद्वारा लाभ हुने गर्दथ्यो, त्यो अब हुने छैन। अल्लाह तआलाले भन्नुभयो कि यस व्यापारमा कमीले तर्सनुको कुनै आवश्यता छैन। अल्लाह तआला आफ्नो कृपाले निकट भविष्यमा तिमीलाई धनवान् गर्नेछ। अतः विजयका कारण धन सामग्री अधिक मात्रामा प्राप्त भयो अनि विस्तारै सारा अरब मुसलमान भयो। यसप्रकार पुनः हज ऋतुमा हाजिहरुको संख्या त्यसैप्रकार भयो, बरु त्यसभन्दा पनि अधिक भयो तथा नित्य यो संख्या बढ्दै गइराखेको छ।

مَا حَرَّمَ اللّٰهُ وَرَسُوْلُهٗ وَلَا يَدِيْنُوْنَ دِيْنَ الْحَقِّ مِنَ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ حَتّٰى يُعْطُوا الْجِزْيَةَ عَنْ يَّدٍ وَّهُمْ صٰغِرُوْنَ ﴿٢٩﴾

तथा त्यसका रसूलद्वारा निषेधित कुरालाई वर्जित ठान्दैनन्, न सत्य धर्मलाई स्वीकार गर्दछन्, ती मानिसहरूमध्ये जसलाई किताब प्रदान गरिएको छ यहाँसम्मकि उनीहरू अपमानित भई आफ्नो हातले सुरक्षाकर भुक्तानी गरुन् ।[1]

وَقَالَتِ الْيَهُوْدُ عُزَيْرُ ابْنُ اللّٰهِ وَقَالَتِ النَّصٰرَى الْمَسِيْحُ ابْنُ اللّٰهِ ذٰلِكَ قَوْلُهُمْ بِاَفْوَاهِهِمْ يُضَاهِـُٔوْنَ قَوْلَ الَّذِيْنَ كَفَرُوْا مِنْ قَبْلُ قٰتَلَهُمُ اللّٰهُ اَنّٰى يُؤْفَكُوْنَ ﴿٣٠﴾

(३०) यहूदीहरू भन्दछन् कि उज़ैर अल्लाहको छोरा हो र इसाई भन्दछन् कि मसीह अल्लाहको छोरा हो। यो कथन केवल उनका आफ्ना मुखका कुरा हुन् । पूर्वका विश्वासहीनको कथनको यिनी पनि समानता गर्न थालेका छन् । अल्लाहले यिनको नाश गरोस् । यिनी कहाँ फर्केर गईराखेका छन् ?

اِتَّخَذُوْٓا اَحْبَارَهُمْ وَرُهْبَانَهُمْ اَرْبَابًا مِّنْ دُوْنِ اللّٰهِ

(३१) उनीहरूले अल्लाहलाई छाडि आफ्ना विद्वान तथा धर्माचारीहरूलाई रब (पोषक) बनाएका छन्,[2] तथा मरियमका पुत्र मसीहलाई

[1]मिश्रणबादीहरुसित लड्नुको आदेशका पश्चात यहूदी तथा ईसाईहरुसित युद्धको आदेश दिइराखेको छ। यदि उनीहरू इस्लाम धर्म स्वीकार गरुन् अथवा सुरक्षाकर दिएर मुसलमानहरुको शरणमा रहन स्वीकार गर्दछन्– सुरक्षाकरलाई “जिज़य:” भन्दछन् । यो उनीहरूको लागि हो जो गैर मुस्लिम छन्, परन्तु इस्लामी राज्यमा बसोबास गरिरहेका छन् । यो एउटा वार्षिक निर्धारित कर हो । यस करलाई तिरे पश्चात उनका धन, मान-सम्मान, जीवनको सुरक्षाको दायित्व मुस्लिम राज्यलाई आइपर्छ यहूदी तथा इसाई यसको बावजूद कि उनीहरू अल्लाह तथा अन्तिम दिनमा विश्वास गर्दथे, उनको विषयमा भनिएको छ कि उनीहरू अल्लाह तथा अन्तिम दिवसमा ईमान राख्दैनथे । यसबाट यो स्पष्ट हुन्छ कि जबसम्म मनुष्य त्यसप्रकारको ईमान राख्दैन जुनप्रकार अल्लाहले आफ्ना पैग़म्बरहरुद्वारा भनेको छ, त्यसबखतसम्म उसको अल्लाहमा ईमान विश्वसनीय हुने छैन । तथा यो पनि स्पष्ट छ कि उनको अल्लाहमा ईमानको विश्वासलाई अयोग्य यसकारण भनियो कि यहूदी तथा इसाईहरुले आदरणीय उज़ैर तथा आदरणीय मसीहलाई अल्लाहको पुत्र तथा पूज्यको विश्वास रचिहालेका थिए जस्तो कि आउने आयतमा उनको यस विश्वासलाई स्पष्ट गरिएको छ ।

[2]यसको व्याख्या आदणीय अदी पुत्र हातिमद्वारा वर्णित हदीसबाट स्पष्ट छ, उनी भन्दछन् कि मैले नबी सल्लल्लाह अलैहि वसल्लमबाट यो आयत सुनेर सोधे कि

وَالْمَسِيحَ ابْنَ مَرْيَمَ ۚ وَمَا أُمِرُوا إِلَّا لِيَعْبُدُوا إِلَٰهًا وَاحِدًا ۖ لَّا إِلَٰهَ إِلَّا هُوَ ۚ سُبْحَانَهُ عَمَّا يُشْرِكُونَ ﴿٣١﴾

यद्यपि कि उनीहरूलाई एउटा एक्लो अल्लाहको उपासनाको आदेश दिइएको थियो, जसबाहेक कोही पूज्य छैन, त्यो उनको मिश्रणको कर्मबाट पवित्र छ ।

يُرِيدُونَ أَن يُطْفِئُوا نُورَ اللَّهِ بِأَفْوَاهِهِمْ وَيَأْبَى اللَّهُ إِلَّا أَن يُتِمَّ نُورَهُ وَلَوْ كَرِهَ الْكَافِرُونَ ﴿٣٢﴾

(३२) उनीहरू अल्लाहको ज्योतिलाई आफ्नै मुखले निभाइदिन चाहन्छन्। किन्तु अल्लाह आफ्नो प्रकाशलाई पूर्ण नगरीकन रहने छैन, चाहे इन्कार गर्नेवालाहरुलाई अप्रिय लागोस् ।[1]

यहूदी तथा इसाईहरूले आफ्ना विद्वानहरुको कहिल्यै पूजा गरेनन्, अनि यो किन भनियो कि, तिनीहरूले उनलाई स्वामी बनाए ? उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, “यो ठीक छ कि तिनीहरूले उनको पूजा कहिल्यै गरेनन्, तर यो कुरो सत्य छ कि तिनका विद्वान अहिले जुन कुरोलाई उचित भने त्यसलाई उचित तथा जसलाई अनुचित भने त्यसलाई अनुचित ठाने । यही उनको पूजा हो ।” (सहीह तिर्मिजी लिल अलबानी संख्या २४७१) किनभने वर्जित तथा मान्य गर्नुको अधिकार केवल अल्लाहलाई छ । यो अधिकार यदि कोही व्यक्ति कुनै अन्यमा भएको स्वीकार गर्दछ भने त्यो व्यक्ति त्यसको पूजा गर्दछ । यस आयतमा उनीहरूका लागि ठूलो चेतावनी छ, जो आफ्ना नेता तथा विचारकहरुलाई वैध तथा अवैधको मान्यता दिन्छन् । उनका कथनको समक्ष कुर्आनका आयत तथा हदीसहरूलाई पनि स्वीकार गर्न तयार हुँदैनन् ।

[1]अर्थात् अल्लाहले ईशदूत, (उहाँमाथि परमेश्वरको दया एवं शान्ति होस्) लाई जुन प्रकाश तथा सत्य धर्म दिएर पठाएको छ यहूदी तथा ईसाई एवं मूर्तिपूजक चाहन्छन् कि त्यसलाई विवाद तथा लान्छनाले मिटाइदेऊन्, त उनको तुलना त्यस मानिस जस्तो छ जो आफ्नो फूँकले सूर्यका किरण तथा चन्द्रमाको प्रकाशलाई निभाउने प्रयत्न गर्दछ । त जुनप्रकार यो असम्भव छ, त्यसैप्रकार जुन सत्य धर्म अल्लाह तआलाले आफ्ना रसूल सल्लल्लाहु अलैहि वसल्लमलाई दिएर पठाएको छ, त्यसलाई मेटाउन पनि असम्भव छ। त्यो सबै धर्महरुमाथि विजयी भएर नै रहनेछ। जस्तो कि आउने आयतमा अल्लाहले आदेश गऱ्यो। काफ़िरको शाब्दिक अर्थ हो लुकाउने व्यक्ति । यसैकारण रातिलाई पनि काफ़िर भन्छन् किनभने त्यो सबै वस्तुहरुलाई आफ्नो अन्धकारमा लुकाउने गर्दछ। कृषकलाई पनि काफ़िर भन्छन् किनभने त्यो अनाजका दानाहरुलाई धर्तीमा लुकाउँछ । अत: काफ़िर पनि अल्लाहको प्रकाशलाई लुकाउन चाहन्छन् अथवा आफ्ना हृदयमा कुफ्र तथा षड्यन्त्र तथा मुसलमानहरु एवं इस्लामका विरुद्ध द्वेष तथा ईर्ष्यालाई लुकाएका छन् । यसकारण उनीहरूलाई काफ़िर भनिन्छ।

هُوَ الَّذِيْٓ اَرْسَلَ رَسُوْلَهٗ بِالْهُدٰى وَدِيْنِ الْحَقِّ لِيُظْهِرَهٗ عَلَى الدِّيْنِ كُلِّهٖ ۙ وَلَوْ كَرِهَ الْمُشْرِكُوْنَ ﴿٣٣﴾

(३३) उसैले आफ्नो दूत (नराशंस) लाई सत्यमार्ग तथा सत्य धर्मका साथ पठायो ताकि त्यसलाई अन्य सबै धर्महरुमाथि प्रभावी गरोस् ।[1] यद्यपि मिश्रणवादीहरुले नराम्रो मानुन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِنَّ كَثِيْرًا مِّنَ الْاَحْبَارِ وَالرُّهْبَانِ لَيَاْكُلُوْنَ اَمْوَالَ النَّاسِ بِالْبَاطِلِ وَيَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ ۭ وَالَّذِيْنَ يَكْنِزُوْنَ الذَّهَبَ وَالْفِضَّةَ وَلَا يُنْفِقُوْنَهَا فِيْ سَبِيْلِ اللّٰهِ ۙ فَبَشِّرْهُمْ بِعَذَابٍ اَلِيْمٍ ﴿٣٤﴾

(३४) हे निष्ठावानहरू ! अधिकतर पण्डित एवं पूजारी, मानिसहरूका धन अनाहक खाईदिन्छन् तथा अल्लाहको मार्गबाट रोक्दछन् ।[2] एवं जो सुनचाँदीको कोष राख्दछन् तथा अल्लाहको मार्गमा व्यय गर्दैनन्, उनीहरूलाई दुखद यातनाको समाचार सुनाइदेउ ।[3]

[1]तर्क तथा युक्तिको आधारमा यो प्रभुत्व प्रत्येक समय प्राप्त छ । परन्तु जव मुसलमानहरूले धर्मको आदेशानुसार कर्म गरे त उनीहरूलाई सांसारिक प्रभुत्व प्राप्त भयो । तथा अब पनि मुसलमान आफ्नो धर्मानुसार कार्य गर्दछन् भने उनको प्रभाव अवश्य सम्भावी छ । यसकारण कि अल्लाहको वाचा छ कि अल्लाहलाई मान्नेहरु नै प्रभावशाली तथा विजयी हुनेछन् । शर्त यो छ कि मुसलमान अल्लाहलाई मान्ने बनून् ।

[2](أحبار) (अहबार) (حِبْر) (हिबर) को बहुवचन हो । यो यस्तो व्यक्तिलाई भन्दछन्, जो कुरोलाई बडो सुन्दरतापूर्ण ढङ्गले प्रस्तुत गर्ने विधि जान्दछ । सुन्दर तथा आकर्षक वस्त्रलाई (ثوب محبّر) भन्दछन् । तात्पर्य यहूदीहरूका विद्वान हुन् (رُهبان) (रूहबान) (راهِب) (राहिब) को बहुवचन हो, जसको उत्पत्ति (رُهبة) (रुहब:) सित छ । यसबाट तात्पर्य इसाईहरुका पण्डित हुन् । केही विद्वानहरूका निकट ईसाईका महात्मा हुन्, विद्वानहरुको लागि यिनी कहाँ (قِسِّيسِين) (क़िस्सीसीन) को शब्द हो । यी दुबै नै अल्लाहका कथनहरुमा परिवर्तन गरी मानिसहरुका इच्छा अनुसार नियम बनाउँछन् । यसप्रकार मानिसहरूलाई अल्लाहको मार्गबाट राक्दछन् । दोस्रो यसप्रकार मानिसहरूसित धन ठग्छन्, जो उनको लागि अनुचित तथा अवैध थियो । दर्भाग्यले मुसलमानहरूका विद्वानहरुमा पनि केहीको यही दशा छ । तथा यसप्रकार नबी सल्लल्लाहु अलैहि वसल्लमको भविष्यवाणी सत्य हुन्छ जसमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएको थियो ( « لَتَتَّبِعُنَّ سُنَنَ مَنْ كَانَ قَبْلَكُمْ » ) (सहीह बुख़ारी किताबुल ऐतेसाममा नबी सल्लल्लाहु अलैहि वसल्लमको यो आदेश अध्यायको शीर्षक छ) "तिमी पूर्वका समुदायहरुका रीति-रिवाजका अनुयायी अवश्य बन्नेछौ ।"

[3]आदरणीय अब्दुल्लाह बिन उमर भन्नुहुन्छ कि यो ज़कातको आदेशभन्दा पूर्वको आदेश हो । ज़कातको आदेश पश्चात ज़कातद्वारा मानिसहरूको मालको शुद्धताको साधन भन्नुभएको छ । यसकारण विद्वानहरुको भनाई छ कि जुन धनबाट ज़कात तिरिन्छ

يَّوْمَ يُحْمٰى عَلَيْهَا فِيْ نَارِ جَهَنَّمَ فَتُكْوٰى بِهَا جِبَاهُهُمْ وَ جُنُوْبُهُمْ وَظُهُوْرُهُمْ ؕ هٰذَا مَا كَنَزْتُمْ لِاَنْفُسِكُمْ فَذُوْقُوْا مَا كُنْتُمْ تَكْنِزُوْنَ ﴿۳۵﴾

(३५) जुन दिन त्यस कोषलाई नरकको आगोमा तताइन्छ अनि त्यसबाट उनका निदार तथा पार्शव तथा पिठ्यूँ दागिने (पोलिने) छ (उनीसित भनिनेछ) यो हो जसलाई तिमीले आफ्नो लागि कोष (खजाना) बनाएर राखेका थियौ, तसर्थ आफ्ना कोषहरुको स्वाद चाख ।

اِنَّ عِدَّةَ الشُّهُوْرِ عِنْدَ اللّٰهِ اثْنَا عَشَرَ شَهْرًا فِيْ كِتٰبِ اللّٰهِ يَوْمَ خَلَقَ السَّمٰوٰتِ وَ الْاَرْضَ مِنْهَاۤ اَرْبَعَةٌ حُرُمٌ ؕ ذٰلِكَ الدِّيْنُ الْقَيِّمُ ۙ۬

(३६) महिनाहरुको गणना अल्लाहका निकट अल्लाहको ग्रन्थमा बारह छ, त्यसै दिनदेखि जब आकाशहरु तथा धर्तीलाई उसले सृष्टि गऱ्यो । उनीहरूमध्ये चार सम्मान तथा आदरका हुन् ।[1] यही शुद्ध धर्म हो ।[2] तिमी यी महिनाहरुमा

त्यो कोष होइन तथा जसबाट ज़कात दिइन्न त्यो कोष हो, जसमाथि कुर्आनको यो चेतावनी आएको छ । अतः सहीह हदीसमा छ कि जुन मान्छे आफ्नो मालको ज़कात निकाल्दैन प्रलयका दिन त्यसको धनको अग्नि पट्टिकाहरु बनाइने छन्, जसबाट त्यसका दुबै बाजु (कोख) लाई, निधारलाई तथा कम्मरलाई पोलिनेछ । यो दिन पचास हजार वर्षको हुनेछ तथा मानिसहरूको निर्णय हुन्जेलसम्म त्यसको त्यही अवस्था रहनेछ, त्यस पश्चात उसलाई स्वर्ग अथवा नर्कमा लगिनेछ । (सहीह मुस्लिम किताबुज़्ज़कात) यिनी बिग्रिएका विद्वान तथा सूफ़िहरुका पश्चात बिग्रिएका धनवान हुन्, तीनटै पक्ष जनतामा बिगाडका सबभन्दा अधिक जिम्मेवार हुन् । (اَللّٰهُمَّ احفظنا منهم)

[1](فِي كِتَابِ اللّٰهِ) सित तात्पर्य 'लौहे महफ़ूज' (सुरक्षित पुस्तक) हो अर्थात् अल्लाह तआलाको आफ्नो पूर्व ज्ञानको आधारमा लेखिएको छ । अर्थात् उत्पत्तिको आरम्भबाट नै अल्लाह तआलाले बारह महिना निर्धारित गरेको छ, जसमा चार निषेधित छन्, जसमा विशेषरूपले युद्ध तथा लडाई निषेध छ । यसै कुरालाई नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले यसप्रकार वर्णन गर्नुभएको छ कि युग घुमिफिरी त्यसै अवस्थामा फर्किसकेको छ, जुन अवस्थामा त्यसबेला थियो, जब अल्लाहले आकाशहरु तथा धर्तीको सृष्टि गरेको थियो । वर्ष बारह महीनाको छ, जसमा चार सम्मानित छन्, तीन निरन्तर ज़िलक़ाअदः, ज़िलहिज्जा, मुहर्रम तथा चौथो रजब जुन जमादिल आख़िर तथा शाबानको मध्यमा छ । (सहीह बुख़ारी संख्या ४४०६ तथा सहीह मुस्लिम संख्या १३०५) युग त्यसै अवस्थामा आएको तात्पर्य यो हो कि अरबका मूर्तिपूजक महिनाहरु अगाडी-पछाडी त्यसैप्रकारले गर्दथे, जसको विस्तृत वर्णन अगाडी आउनेछ, यो त्यसको अन्त्य हो ।

[2]अर्थात् ती महिनाहरुको त्यसै क्रममा हुनु, जुन अल्लाहले राखेको छ तथा जसमा चार सम्मानित छन् । तथा यही गणित सही र संख्या पूर्ण छ ।

فَلَا تَظْلِمُوا فِيهِنَّ أَنفُسَكُمْ وَقَاتِلُوا الْمُشْرِكِينَ كَافَّةً كَمَا يُقَاتِلُونَكُمْ كَافَّةً ۚ وَاعْلَمُوا أَنَّ اللَّهَ مَعَ الْمُتَّقِينَ ﴿٣٦﴾

आफ्ना प्राणहरुमाथि अत्याचार नगर।[1] तथा तिमी सबै मुर्तिपूजकहरुसित धर्मयुद्ध गर, जस्तो कि उनीहरू तिमी सबैसित लड्छन्।[2] तथा जानिराख कि अल्लाह तआ़ला परहेज़गारहरुको (संयमीहरूको) साथमा छ।

إِنَّمَا النَّسِيءُ زِيَادَةٌ فِي الْكُفْرِ ۖ يُضَلُّ بِهِ الَّذِينَ كَفَرُوا يُحِلُّونَهُ عَامًا وَيُحَرِّمُونَهُ عَامًا لِّيُوَاطِئُوا عِدَّةَ مَا حَرَّمَ اللَّهُ فَيُحِلُّوا مَا حَرَّمَ اللَّهُ ۚ زُيِّنَ لَهُمْ سُوءُ أَعْمَالِهِمْ ۗ وَاللَّهُ

(३७) महिनाहरुलाई अगाडी-पछाडी गरिदिनु कुफ्रको परिवर्धन हो।[3] त्यसबाट उनीहरू पथ-विचलित गरिन्छन्, जो विश्वासहीन छन्। एक वर्षलाई अवर्जित गर्दछन् तथा एक वर्षलाई आदरणीय बनाउँछन् ताकि अल्लाहले जे निषेध गरेको छ त्यसको गणनामा त समानता गरुन्।[4] अनि जसलाई निषेध गरेको छ त्यसलाई

[1]अर्थात् यी महिनाहरुमा रक्तपात गरी तिनको निरादर तथा अल्लाहका आदेशहरुको अवहेलना गरेर।

[2]परन्तु सम्मानित महिनाहरु व्यतीत भए पश्चात। यदि उनीहरू लड्न बाध्य गरिदिन्छन् भने सम्मानित महिनाहरुमा तिम्रो लागि युद्ध गर्नु पनि उचित हुनेछ।

[3](نَسِيّ) (नसीउन) को अर्थ 'पछि पर्नु' हो। अरबहरुमा सम्मानित महिनाहरुमा लुटमार, रक्तपात तथा युद्धलाई अप्रिय ठानिन्थ्यो। परन्तु निरन्तर तीन महिनाहरुको आदर गर्नु रक्तपातबाट रोकिनु, उनको लागि कठिन थियो। यसकारण त्यसको समाधान उनीहरूले यो निकालेका थिए कि जुन सम्मानित महिनाहरुमा उनीहरू रक्तपात गर्न चाहन्थे, उनीहरू गरिहाल्थे तथा यो घोषणा गरिदिन्थे कि यस सम्मानित महिनाको साटो अमूक महिना सम्मानित हुनेछ। जस्तो मुहर्रमका महिनाहरुको आदर समाप्त गरी सफरका महिनाहरुलाई सम्मानित घोषित गरिदिन्थे। यसप्रकार आदर भएका महिनाहरुमा परिवर्तन तथा फेरबदलको परिबर्धन लिने गर्दथे। यसलाई 'नसी' भनिन्थ्यो। अल्लाह तआ़लाले त्यसको विषयमा आदेश गर्नुभयो कि यो अधर्मको परिवर्धन हो किनभने यस फेरबदलबाट उद्देश्य लडाई-झगडा, रक्तपात तथा सांसारिक लाभका अतिरिक्त केही पनि छैन। तथा नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले पनि त्यसको समापनको घोषणा यसप्रकार गर्नुभयो कि युग घुमिफिरी आफ्नो वास्तविक अवस्थामा आयो। अर्थात् अब भविष्यमा यसको क्रम यसैप्रकार रहनेछ, जुनप्रकार उत्पत्तिको प्रारम्भदेखि चलिआइराखेको छ।

[4]अर्थात् एक महिनाको आदर समाप्त गरी त्यसको ठाउँमा अर्को महिनालाई आदरणीय घोषित गरिदिनुबाट उनको उद्देश्य यो हुन्थ्यो कि अल्लाह तआ़लाले जुन चार आदरका

لَا يَهْدِى الْقَوْمَ الْكٰفِرِيْنَ ﴿٣٧﴾

वैधानिक बनाऊन्, तिनका कुकर्म तिनीहरूलाई सत्कर्म देखाइएका छन् तथा अल्लाह काफ़िरहरुलाई मार्गदर्शन दिंदैन ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا مَا لَكُمْ اِذَا قِيْلَ لَكُمُ انْفِرُوْا فِيْ سَبِيْلِ اللّٰهِ اثَّاقَلْتُمْ اِلَى الْاَرْضِ ۭ اَرَضِيْتُمْ بِالْحَيٰوةِ الدُّنْيَا مِنَ الْاٰخِرَةِ ۚ فَمَا مَتَاعُ الْحَيٰوةِ الدُّنْيَا فِي الْاٰخِرَةِ اِلَّا قَلِيْلٌ ﴿٣٨﴾

(३८) हे मोमिनहरू ! तिमीलाई के भएको छ कि जब तिमीसित भनिन्छ कि हिंड अल्लाहको मार्गमा प्रस्थान गर त तिमी धर्तीसित टाँसिन्छौ । के तिमी परलोकको साटो संसारको जीवनमा नै रमेका छौ । सुन ! संसारको जीवन परलोकको तुलनामा अति तुच्छ छ ।

اِلَّا تَنْفِرُوْا يُعَذِّبْكُمْ عَذَابًا اَلِيْمًا ۙ وَّيَسْتَبْدِلْ قَوْمًا غَيْرَكُمْ وَلَا تَضُرُّوْهُ شَيْـًٔا ۭ وَاللّٰهُ عَلٰي كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٣٩﴾

(३९) यदि तिमीले प्रस्थान गरेनौ भने अल्लाह (तआ़ला) ले तिमीलाई दुखदायी दण्ड दिनेछ तथा तिम्रो ठाउँमा अन्य समूहलाई ल्याउनेछ अनि तिमी अल्लाह (तआ़ला) लाई कुनै हानि पुऱ्याउन सक्दैनौ ।[1] तथा अल्लाह तआ़ला सर्वशक्तिमान छ ।

---

महिना निर्धारित गरेको छ, उनको गणना पूरा गरियोस्, अर्थात् गणना पूरा गर्नमा अल्लाह तआ़लाको पक्ष गर्दथे, परन्तु अल्लाह तआ़लाले रक्तपात, युद्ध तथा लडाइ-झगडाबाट जुन मनाही गरेको थियो, त्यसको उनीहरूलाई कुनै चिन्ता थिएन, बरु तिनै अत्याचारी प्रवृत्तिहरुका कारण नै उनका क्रममा परिवर्तन गर्दथे ।

[1]रोमको ईसाई राजा हरक्यूलसको विषयमा यो सूचना प्राप्त भयो कि त्यो मुसलमानहरूका विरुद्ध युद्धको तयारी गरिराखेको छ । अतः नबी सल्लल्लाहु अलैहि वसल्लम पनि यसको लागि तयारीको आदेश दिनुभयो । यो शव्वाल ९ हिजरीको घटना हो । ग्रीष्म ऋतु थियो तथा लामो यात्रा थियो । केही मुसलमान तथा अवसरवादीहरुलाई यो आदेश अप्ठ्यारो लाग्यो जसको वर्णन यस आयतमा गरिएको छ । तथा उनीहरूलाई सचेत तथा सावधान गरिएको छ । यसलाई कठिनाईहरुको युद्ध भनिन्छ । किनभने यस लामो यात्रामा यस सेनालाई अधिक कठिनाईहरुको सामना गर्नुपरेको थियो । (اثَّاقَلْتُمْ) अर्थात् आलस्य गर्न तथा पछि रहन चाहन्छौ । यसको प्रदर्शन केही मानिसहरूको तर्फबाट भयो, परन्तु यसलाई सम्बोधित सबैसित गरियो । (फ़तहुल क़दीर)

إِلَّا تَنصُرُوهُ فَقَدْ نَصَرَهُ اللَّهُ إِذْ أَخْرَجَهُ الَّذِينَ كَفَرُوا ثَانِيَ اثْنَيْنِ إِذْ هُمَا فِي الْغَارِ إِذْ يَقُولُ لِصَاحِبِهِ لَا تَحْزَنْ إِنَّ اللَّهَ مَعَنَا ۖ فَأَنزَلَ اللَّهُ سَكِينَتَهُ عَلَيْهِ وَأَيَّدَهُ بِجُنُودٍ لَّمْ تَرَوْهَا وَجَعَلَ كَلِمَةَ الَّذِينَ كَفَرُوا السُّفْلَىٰ ۗ وَكَلِمَةُ اللَّهِ هِيَ الْعُلْيَا ۗ وَاللَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٤٠﴾

(४०) यदि तिमी उसको (ईशदूत मुहम्मद) सहायता गर्दैनौ भने पनि अल्लाहले नै उसको सहायता त्यसबेला गरेको हो जब अधर्मीहरुले उसलाई (देशबाट) निकालिदिएका थिए। दुईमध्ये दोस्रो थियो जबकि ती दुबै गुफामा थिए। जबकि त्यसमा आफ्ना साथीहरुसित भन्दै थिए कि चिन्ता नगर अल्लाह हाम्रो साथमा छ।[1] तब अल्लाहले नै आफ्नो तर्फबाट शान्ति अवतरित गरी ती सेनाहरुबाट त्यसको सहायता गर्‍यो जसलाई तिमीले देख्न पनि सकेनौ।[2] उसले काफ़िरहरुको कुरा तल पारिदियो तथा उच्च एवं श्रेष्ठ अल्लाहकै कथन हो।[3] अल्लाह (तआ़ला) प्रभावशाली तथा विवेकी छ।

---

[1]धर्मयुद्धबाट पछि हट्ने अथवा त्यसबाट प्राण जोगाउनेहरुसित भनिदैछ कि यदि तिमी सहायता गर्दैनौं भने अल्लाहलाई तिम्रो सहायताको आवश्यकता पनि छैन। अल्लाह तआ़लाले आफ्नो सन्देशवाहकको त्यसबेला पनि सहायता गर्‍यो, जब उसले गुफामा शरण लिएको थियो तथा आफ्नो साथी (आदरणीय अबू बक्र सिद्दीक) सित भनेको थियो, "चिन्ता नगर अल्लाह हाम्रो साथमा छ।" यसको विस्तृत वर्णन हदीसमा पाईन्छ। आदरणीय अबू बक्र सिद्दीक (رضى الله عنه) भन्नुहुन्छ, जब हामी गुफामा थियौं, तब मैले नबी सल्लल्लाहु अलैहि वसल्लमसित भने, "यदि यी मूर्तिपूजकहरुले (जो हाम्रा खोजीमा छन्) हाम्रा खुट्टातिर हेरे भने, त हामीलाई देख्नेछन्।" परम आदरणीय नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो,

« يَا أَبَا بَكْرٍ! مَا ظَنُّكَ بِاثْنَيْنِ اللَّهُ ثَالِثُهُمَا »

"हे अबू बक्र ! तिम्रो ती दुईको विषयमा के विचार छ जसको तेस्रो अल्लाह छ।" (सहीह बुख़ारी तफ़सीर सूरः तौबः)

[2]यी सहायताका ती दुई परिस्थितिहरु वर्णन गरिएका हुन्, जसबाट अल्लाहका रसूल (सल्लल्लाहु अलैहि वसल्लम) को सहायता गरियो। एउटा हृदयको शान्ति तथा दोस्रो फरिश्ताहरुको समर्थन।

[3]काफ़िरहरूको कथनबाट शिर्क तथा अल्लाहको कथनबाट तौहिद (एकेश्वरवाद) को तात्पर्य छ। जुनप्रकार एक हदीसमा वर्णन गरिएको छ। रसूलुल्लाह सल्लल्लाहु अलैहि

اِنْفِرُوْا خِفَافًا وَّثِقَالًا وَّجَاهِدُوْا بِاَمْوَالِكُمْ وَاَنْفُسِكُمْ فِيْ سَبِيْلِ اللّٰهِ ؕ ذٰلِكُمْ خَيْرٌ لَّكُمْ اِنْ كُنْتُمْ تَعْلَمُوْنَ ﴿۴۱﴾

(४१) अगाडि बढिहाल हलुङ्गो अथवा गह्रुङ्गो रुपले[1] तथा अल्लाहको मार्गमा आफ्नो तन, मन, धनले धर्मयुद्ध गर, यही तिम्रो लागि उत्तम छ यदि तिमीमा ज्ञान छ भने ।

لَوْ كَانَ عَرَضًا قَرِيْبًا وَّسَفَرًا قَاصِدًا لَّاتَّبَعُوْكَ وَلٰكِنْۢ بَعُدَتْ عَلَيْهِمُ الشُّقَّةُ ؕ وَسَيَحْلِفُوْنَ بِاللّٰهِ لَوِ اسْتَطَعْنَا لَخَرَجْنَا مَعَكُمْ ۚ يُهْلِكُوْنَ

(४२) यदि शीघ्र प्राप्त हुने धन तथा हलुङ्गो यात्रा भएको भए[2] यिनीहरू अवश्य तपाईंका पछाडि लागिहाल्थे[3] तर मार्गको दूरी उनीहरूलाई कठिन र धेरै ठूलो लाग्यो । तथा अब त यिनीहरू अल्लाहको कसम खाने छन् कि यदि हामीमा शक्ति तथा सामर्थ्य भएको भए

वसल्लमसित सोधियो । "एउटा व्यक्ति वीरताको प्रदर्शनको लागि लड्दछ, एउटा आफ्नो जातिको सम्मान तथा आदरको लागि लड्छ, तथा एउटा अन्य देखावटीपना अथवा छलकपटको लागि लड्दछ । यिनीहरूमध्ये अल्लाहको मार्गमा लड्ने कुनचाहिं हो ?" उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "जो यसकारण लड्छ कि अल्लाहको कथन सर्वोच्च होस्, त्यो अल्लाहको मार्गमा लड्दछ ।" (सहीह बुख़ारी किताबुल इल्म र मुस्लिम किताबुल इमारः)

[1]यसका विभिन्न भावार्थ वर्णन गरिएका छन् । व्यक्तिगत रूपले अथवा सामूहिक रूपले, प्रसन्नताले अथवा अप्रसन्नताले, निर्धन होस् अथवा धनवान होस्, युवक होस् अथवा बृद्ध होस्, पैदल होस् अथवा सवार होस्, विवाहित होस् अथवा अविवाहित होस्, त्यो प्रस्थान गर्नेमध्ये होस् अथवा नजानेहरूमध्ये होस् । इमाम शौकानी भन्नुहुन्छ कि आयतको प्रभाव सबै क्षेत्रमा हुनसक्छ किनभने आयतको अर्थ यो हो कि तिमी प्रस्थान गर, चाहे आवागमन तिम्रो निम्ति बोझ होस् अथवा हलुङ्गो तथा यस भावार्थमा वर्णित सबै भावार्थ आउँछन् ।

[2]यहाँबाट तिनीहरूको वर्णन भइराखेको छ जसले कारण भनी नबी सल्लल्लाहु अलैहि वसल्लमबाट आज्ञा लिएका थिए । जबकि वास्तवमा उनीसित कुनै कारण थिएन । (عَرَض) सित तात्पर्य जुन सांसारिक लाभ अगाडी आउँछन्, अर्थ हो युद्धमा प्राप्त धन सामग्री ।

[3]अर्थात् उहाँ सल्लल्लाहु अलैहि वसल्लमका साथमा धर्मयुद्धमा सम्मिलित हुन्थे, तर लामो यात्राले उनीहरूलाई बहाना बनाउनमा विवश गरिदियो ।

اَنْفُسَهُمْ ۚ وَاللّٰهُ يَعْلَمُ اِنَّهُمْ لَكٰذِبُوْنَ ﴿٤٢﴾

हामी अवश्य नै तपाईंको साथमा निस्कने थियौं, यिनी आफ्ना प्राणहरुलाई स्वयं नै विनाशतिर लगिराखेका छन् ।[1] यिनीहरू झूठा हुनुको सत्य ज्ञान अल्लाहलाई छ ।

عَفَا اللّٰهُ عَنْكَ ۚ لِمَ اَذِنْتَ لَهُمْ حَتّٰى يَتَبَيَّنَ لَكَ الَّذِيْنَ صَدَقُوْا وَتَعْلَمَ الْكٰذِبِيْنَ ﴿٤٣﴾

(४३) अल्लाहले तिमीलाई क्षमा गरोस्, तिमीले उनीहरूलाई किन अनुमति दियौ, जबकि जो साँचा छन्, उनीहरू तिम्रो सामु प्रकट हुन्थे र झूठाहरुलाई पनि तिमी जानीहाल्थ्यौ ।[2]

لَا يَسْتَاْذِنُكَ الَّذِيْنَ يُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ اَنْ يُّجَاهِدُوْا بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ ۗ وَاللّٰهُ عَلِيْمٌۢ بِالْمُتَّقِيْنَ ﴿٤٤﴾

(४४) अल्लाहमा तथा केयामत (प्रलय) का दिनमा ईमान तथा विश्वास राख्नेहरू त माल तथा ज्यानसित धर्मयुद्ध गर्नुबाट रोकिइरहनुको अनुमति तिमीसित कहिल्यै पनि माग्ने छैनन्[3] र अल्लाह तआला सदाचारीहरुलाई राम्ररी जान्दछ ।

---

[1]अर्थात् झूठो कसम खाएर । किनभने झूठो सौगन्ध खानु महापाप हो ।

[2]यो नबी करीम सल्लल्लाहु अलैहि वसल्लमसित भनिंदैछ कि धर्मयुद्धमा सम्मिलित नहुनको लागि आज्ञा माग्नेहरुलाई तिमीले किन पत्ता नलगाईकन कि यिनीहरूको पासमा ठोस कारण छ पनि वा छैन आज्ञा दियो । तर यस चेतावनीमा पनि प्रेमको पक्षको वर्चस्व छ, यसकारण कि यस भूलमा क्षमाको स्पष्टीकरण पहिले नै गरिदिइयो । याद रहोस् कि यो चेतावनी यसकारण थियो कि आज्ञा दिनुमा शीघ्रता गरियो तथा पूर्णरुपले पत्ता लगाउनुको आवश्यकता महसुस गरिएन । अन्यथा खोज गर्नुका पश्चात आवश्यक मानिसहरूलाई आज्ञा प्रदान गर्नुको तपाईंलाई आज्ञा थियो जस्तो कि आदेश भयो ।

﴿ فَإِذَا اسْتَأْذَنُوكَ لِبَعْضِ شَأْنِهِمْ فَأْذَنْ لِمَنْ شِئْتَ مِنْهُمْ ﴾

"जब यिनीहरू तपाईंसित आफ्ना केही कर्महरुका कारण आज्ञा माँगदछन् भने जसलाई तिमी चाहन्छौ आज्ञा प्रदान गरिदेउ ।" (सूरः अल-नूर-६२)

"जसलाई चाहन्छौ" को अर्थ यो हो कि जसको पासमा उचित कारण छ, त्यसलाई आज्ञा प्रदान गर्नुको अधिकार तिमीलाई प्राप्त छ ।

[3]यो मात्र शुद्ध ईमान्दारहरुको व्यवहारको वर्णन हो, बरु उनको त आचरण एवं व्यवहार पनि यस्तो छ कि उनी धर्मयुद्धमा अगाडी बढेर अधिक प्रसन्नताका साथ भाग लिन्छन् ।

(४५) यो आज्ञा त तिमीसित तिनैले माँगदछन्, जसलाई न अल्लाहमा ईमान छ, न आख़िरतको दिनमा विश्वास छ, जसका हृदय सन्देहमा परेका छन् तथा यिनी आफ्नो सन्देहमा नै उद्विग्न (अस्थिर) छन् ।[1]

إِنَّمَا يَسْتَأْذِنُكَ الَّذِينَ لَا يُؤْمِنُونَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَارْتَابَتْ قُلُوبُهُمْ فَهُمْ فِي رَيْبِهِمْ يَتَرَدَّدُونَ ﴿٤٥﴾

(४६) यदि उनीहरूको विचार धर्मयुद्ध (ज़िहाद) को लागि निस्किने भएको भए, उनी यस (यात्रा) का निम्ति संसाधनको तयारी गर्दथे ।[2] तर अल्लाहलाई उनी उठ्नु प्रिय थिएन,

وَلَوْ أَرَادُوا الْخُرُوجَ لَأَعَدُّوا لَهُ عُدَّةً وَلَٰكِن كَرِهَ اللَّهُ انبِعَاثَهُمْ فَثَبَّطَهُمْ وَقِيلَ اقْعُدُوا مَعَ الْقَاعِدِينَ ﴿٤٦﴾

---

[1]यो ती मुनाफ़िकहरु (अवसरवादी) को वर्णन हो, जसले झुठा बहाना बनाएर रसूल करीम सल्लल्लाहु अलैहि वसल्लमसित धर्मयुद्धमा भाग नलिनुको आज्ञा प्राप्त गरेका थिए । उनका विषयमा भनिएको छ कि यिनीहरू अल्लाहमा तथा आख़िरतको दिनमा ईमान राख्दैनन् । यसको अर्थ यो हो कि यस ईमानको अभावले उनलाई धर्मयुद्धमा भाग नलिनुमा विवश गरिएको छ । यदि ईमान उनका हृदयमा सुदृढ भएको भए न त यिनीहरू धर्मयुद्धबाट भाग्थे तथा न यिनलाई शंका तथा सन्देहले घेरथ्यो ।

टिप्पणीः- ध्यान रहोस् कि यस धर्मयुद्धमा भाग लिने विषयमा मुसलमानहरुका चार श्रेणी थिए :

प्रथम ती मुसलमान जो बिना कुनै सोच-विचार तयार भए, द्वितीय उनीहरू जसलाई प्रारम्भमा केही उनका हृदयमा विचलन उत्पन्न भयो, तर पछि त्यस विचलनबाट उम्के, तृतीय उनीहरू जो केही बृद्धा अवस्था, रोग अथवा सवारी एवं यात्राको खर्च उठाउन वास्तवमा योग्य थिएनन् । तथा जसलाई स्वयं अल्लाह तआलाले भाग नलिनुको आज्ञा प्रदान गरेको थियो । (उनको वर्णन आयत संख्या ९१ तथा ९२ मा छ) तथा चौथो श्रेणीमा उनीहरू जो मात्र आलस्यका कारण भाग लिन सकेनन् । तथा नबी सल्लल्लाहु अलैहि वसल्लम फर्केर आउनुभयो तब उनीहरूले आफ्ना पाप स्वीकार गरी आफूलाई तौबा तथा दण्डको लागि प्रस्तुत गरे । यसका अतिरिक्त शेष सबै मुनाफ़िक (भ्रष्टाचारी) तथा उनका गुप्तचर थिए । यहाँ मुसलमानहरुको प्रथम गिरोह तथा भ्रष्टाचारी (मुनाफ़िकहरु) को वर्णन छ । मुसलमानहरुका शेष तीन श्रेणीहरुको वर्णन अगाडी आउनेछ ।

[2]यो तिनै मुनाफ़िकहरुको विषयमा भनिदैछ जसले असत्य बोलेर आज्ञा प्राप्त गरेका थिए कि यदि उनीहरू धर्मयुद्धमा जानुको विचार राखेको भए त अवश्य जानको लागि प्रबन्ध गर्थे ।

यसकारण उनीहरूलाई केही गर्नुबाट रोकिदियो ।[1] तथा भनियो कि तिमी बस्नेहरुको साथमा बसिराख ।[2]

(४७) यदि यिनी तिमीमा मिसिएर निस्केका भएपनि तिम्रो लागि उपद्रवका अतिरिक्त अन्य कुनै कुराको अभिबृद्धि गर्दैनथे ।[3] बरु तिम्रा माँझमा घोडाहरु निकै दगुराउँथे तथा तिमीमा मतभेद पार्नुको खोजीमा रहन्थे ।[4] तथा अल्लाह तआ़ला अत्याचारीहरुलाई राम्ररी जान्दछ ।

لَوْ خَرَجُوا فِيكُم مَّا زَادُوكُمْ إِلَّا خَبَالًا وَلَأَوْضَعُوا خِلَالَكُمْ يَبْغُونَكُمُ الْفِتْنَةَ وَفِيكُمْ سَمَّاعُونَ لَهُمْ ۗ وَاللَّهُ عَلِيمٌ بِالظَّالِمِينَ ﴿٤٧﴾

(४८) यिनी त यसभन्दा पूर्व पनि मतभेद उत्पन्न गर्नुको खोजीमा रही आएका छन् तथा तिम्रो लागि कार्यहरु

لَقَدِ ابْتَغَوُا الْفِتْنَةَ مِن قَبْلُ

[1](فَثَبَّطَهُم) को अर्थ हो उनलाई रोकिदियो अर्थात् पछि रहनु उनको लागि प्रिय बनाइयो, अतः उनीहरू सुस्त भए तथा मुसलमानहरुको साथमा निस्केनन् । (ऐसरुत्तफ़ासीर) अर्थ यो हो कि अल्लाहको ज्ञानमा उनका कुविचार तथा षड्यन्त्र थिए, यसकारण अल्लाहद्वारा भाग्य लेखिएको यही थियो कि उनीहरू नजाऊन् ।

[2]यो या त अल्लाहको त्यसै इच्छाको अनुरूप छ जुन भाग्यमा लेखिएको थियो अथवा अप्रसन्नता तथा क्रोधका कारण रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको तर्फबाट भनिएको छ कि तिमी स्त्री, बच्चा, रोगी तथा बृद्धाहरुका श्रेणीमा सम्मिलित भई उनी समान घरहरुमा बसिराख ।

[3]यी मुनाफ़िक (अवसरवादी) यदि इस्लामी सेनामा सम्मिलित भएको भए आफ्ना त्रुटिपूर्ण विचार तथा परामर्शले मुसलमानहरुमा उपद्रव कै कारण बन्थे ।

[4](إيضاع) को अर्थ हुन्छ, आफ्नो सवारी तीब्र गतिले दगुराउनु । अर्थ यो हो कि अपवाद आदिद्वारा तिमीमा उपद्रव उत्पन्न गर्नुमा कुनै कमी बाँकी राख्दैनथे तथा उपद्रवको अर्थ एकतामा फाटो पार्नु तथा उनीहरूमध्ये द्वेष तथा घृणा उत्पन्न गरिदिनु हो ।

[5]यसबाट ज्ञात हुन्छ कि मुनाफ़िकहरु (अवसरवादी) का लागि गुप्तचरको कार्य गर्ने केही व्यक्तिहरु मुसलमानहरुका साथमा सेनामा उपस्थित थिए, जो मुनाफ़िकहरुलाई मुसलमानहरुका सूचना पुऱ्याउने गर्दथे ।

وَقَلَّبُوا لَكَ الْأُمُورَ حَتَّىٰ جَاءَ الْحَقُّ وَظَهَرَ أَمْرُ اللَّهِ وَهُمْ كَارِهُونَ ﴿٤٨﴾

लाई उलट-पुलट गर्दैरहेका छन्, अनि सत्य आइपुग्यो तथा अल्लाहको आदेश प्रभावी रहयो,[1] यद्यपि उनीहरू अप्रसन्न नै रहे ।[2]

وَمِنْهُم مَّن يَقُولُ ائْذَن لِّي وَلَا تَفْتِنِّي ۚ أَلَا فِي الْفِتْنَةِ سَقَطُوا ۗ وَإِنَّ جَهَنَّمَ لَمُحِيطَةٌ بِالْكَافِرِينَ ﴿٤٩﴾

(४९) उनीहरूमध्ये कोही छ जो भन्दछ कि मलाई आज्ञा दिनुस्, मलाई विपदामा नपार्नुस्, सचेत रह कि उनी त आपतमा परिसकेका छन् तथा निःसन्देह नरकले काफ़िरहरुलाई घेरिहाल्नेछ ।[3]

[1]यसैकारण उसले भूत तथा भविष्यका कुराबाट तिमीलाई सूचित गरिदियो तथा यो पनि भनिदियो कि जो मुनाफ़िक (भ्रष्टाचारीहरु) साथमा गएनन्, त तिम्रो पक्षमा राम्रो नै हो यदि उनीहरू आएको भए त यी खराबीहरु (अनिष्ट) उत्पन्न हुन्थे ।

[2]अर्थात् यी मुनाफ़िक त जबदेखि उहाँ सल्लल्लाहु अलैहि वसल्लम मदीना नगरमा आउनु भएको छ, त्यतिखेर देखि नै उहाँ सल्लल्लाहु अलैहि वसल्लमका विरुद्ध षड्यन्त्र गर्ने, तथा सम्बन्धहरुलाई बिगार्नमा तत्पर रहिआएका छन्, अनि बद्रमा अल्लाह तआलाले मुसलमानहरुलाई विजय प्रदान गऱ्यो, जुन यिनका लागि अत्याधिक अप्रिय थियो, यसैप्रकार उहुदको युद्धको अवसरमा पनि यी मुनाफ़िकहरुले मार्गबाट नै वापस भई कठिनाई उत्पन्न गरे तथा त्यस पश्चात सबै अवसरहरुमा बिगाडको प्रयत्न गरिरहे । यहाँसम्मकि मक्का विजय भयो तथा अधिकतर अरब मुसलमान भए, जसमा उनीहरू दुखले अफसोच गरिराखेका छन् ।

[3]"मलाई आपत (भेद) मा नपार्नुस् ।" यसको एउटा अर्थ त यो हुन्छ कि तपाई मलाई आज्ञा दिनुहुन्न भने मलाई बिना आज्ञा रुक्नुमा अत्याधिक पाप हुनेछ, यस आधारमा भेद 'पाप' को अर्थमा हुनेछ । अर्थात् मलाई पापमा नपार्नुस् । भेदको दोस्रो अर्थ विनाश हो अर्थात् मलाई साथमा लगेर विनाशमा नपार्नुस् । भनिन्छ कि जद बिन क़ैसले निवेदन गरे कि मलाई साथमा नलग्नुस् । रोमका स्त्रीहरुलाई देखेर म धैर्य राख्नसक्ने छैन । यसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले मुख फर्काउनु भयो र आज्ञा दिनुभयो । त्यस पश्चात आयत अवतरित भयो । अल्लाह तआलाको आदेश भयो, "भेदमा त उनी खसिसकेका छन् ।" अर्थात् धर्मयुद्धमा पछि रहनु तथा त्यसबाट प्राण जोगाउनु स्वयं एउटा भेद तथा महापाप हो, जसमा यिनी सम्मिलित छन् तथा मृत्यु पश्चात नरकको आगोले उनलाई घेर्दछ, जसबाट भाग्नुको कुनै मार्ग उनीहरूको लागि हुनेछैन ।

إِن تُصِبْكَ حَسَنَةٌ تَسُؤْهُمْ ۖ وَإِن تُصِبْكَ مُصِيبَةٌ يَقُولُوا قَدْ أَخَذْنَا أَمْرَنَا مِن قَبْلُ وَيَتَوَلَّوا وَّهُمْ فَرِحُونَ ﴿٥٠﴾

(५०) तपाईंलाई यदि कुनै शुभ कुरो हुन्छ भने उनीहरूलाई नराम्रो लाग्दछ तथा कुनै विपदा आईपुग्छ भने भन्दछन्, हामीले त आफ्नो कुरो पहिले नै ठीक पारिहालेका थियौं, अनि उनीहरू बडो प्रसन्न भएर फर्कन्छन् ।[1]

قُل لَّن يُصِيبَنَا إِلَّا مَا كَتَبَ اللَّهُ لَنَا هُوَ مَوْلَانَا ۚ وَعَلَى اللَّهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُونَ ﴿٥١﴾

(५१) (तपाईं) भनिदिनुस् कि हाम्रो पक्षमा अल्लाहले लेखेको बाहेक कुनै कुरो पुग्न सक्दैन । त्यो हाम्रो स्वामी हो, तथा (तपाईं भनिदिनुस्) ईमान भएकाहरुले अल्लाहमाथि नै पूर्ण भरोसा गर्नुपर्दछ ।[2]

قُلْ هَلْ تَرَبَّصُونَ بِنَا إِلَّا إِحْدَى الْحُسْنَيَيْنِ ۖ وَنَحْنُ نَتَرَبَّصُ بِكُمْ أَن يُصِيبَكُمُ اللَّهُ بِعَذَابٍ مِّنْ عِندِهِ أَوْ بِأَيْدِينَا ۖ فَتَرَبَّصُوا

(५२) भनिदिनुस् कि तिमी हाम्रो विषयमा जुन कुरोको प्रतिक्षामा छौ, त्यो दुई भलाईहरुमध्ये एक हो,[3] तथा हामी तिम्रो पक्षमा यस कुराको प्रतीक्षामा छौं कि या त अल्लाह (तआला)ले तिमीलाई आफ्नो पासबाट कुनै दण्ड देओस् अथवा हाम्रा

[1]सम्बन्धित कथनको आधारमा (حسنة) बाट यहाँ सफलता तथा लाभ एवं (سيئة) बाट असफलता, पराजय तथा यसैप्रकारका हानिहरु जुन युद्धमा हुन्छन्, तात्पर्य छ । यसमा उनका आन्तरिक नराम्रो कुराको प्रदर्शन छ, जुन मुनाफ़िकहरु (भ्रष्टाचारी) का हृदयमा थियो । यसकारण कि कष्टमा प्रसन्न हुनु तथा राम्रो कुरा प्राप्त भएमा दुख तथा कष्टको आभास गर्नु शत्रुताका कारणहरुलाई प्रदर्शित गर्दछ ।

[2]यो मुनाफ़िकहरु (अवसरवादी) को उत्तरमा मुसलमानहरुको धैर्य, दृढता तथा साहसको लागि भनिदैछ, किनभने जब मनुष्यलाई यो ज्ञात हुन्छ कि अल्लाहको तर्फबाट भाग्यमा लेखिएको कुरो प्रत्येक अवस्थामा हुन्छ तथा जस्तोसुकै कठिनाई तथा भलाई हामीलाई पुग्दछ, त्यसै अल्लाहद्वारा लिखित भाग्यको भाग हो । तसर्थ मनुष्यका लागि कठिनाईलाई सहन गर्नु सरल हुन्छ तथा त्यसको साहस बढेर जान्छ ।

[3]अर्थात् सफलता अथवा शहादत, यी दुबैमध्ये जुन पनि हामीलाई प्राप्त हुन्छ हाम्रो लागि भलाई छ ।

إِنَّا مَعَكُم مُّتَرَبِّصُونَ ۝

हातहरुबाट ।[1] अतः एकातिर तिमी प्रतीक्षा गर, अर्कोतिर हामी तिमीसँग प्रतिक्षा गरिराखेका छौं ।

قُلْ أَنفِقُوا طَوْعًا أَوْ كَرْهًا لَّن يُتَقَبَّلَ مِنكُمْ ۖ إِنَّكُمْ كُنتُمْ قَوْمًا فَاسِقِينَ ۝

(५३) भनिदिनुस् कि तिमी इच्छा पूर्वक अथवा अनिच्छाले कुनै प्रकार पनि खर्च गर, स्वीकार त कदापि गरिने छैन ।[2] निःसन्देह तिमीहरु अवज्ञाकारी मानिसहरू हौ ।

وَمَا مَنَعَهُمْ أَن تُقْبَلَ مِنْهُمْ نَفَقَاتُهُمْ إِلَّا أَنَّهُمْ كَفَرُوا بِاللَّهِ وَبِرَسُولِهِ وَلَا يَأْتُونَ الصَّلَاةَ إِلَّا وَهُمْ كُسَالَىٰ وَلَا يُنفِقُونَ إِلَّا وَهُمْ كَارِهُونَ ۝

(५४) उनका खर्च अस्वीकृत हुनुमा यस बाहेक अरु कुनै कुरो बाधक छैन कि उनले अल्लाह र त्यसका रसूलसित कुफ्र (अवज्ञा) गरे तथा नमाज़मा आलस्यले आउँछन् तथा नराम्रो हृदयले खर्च गर्दछन् ।[3]

[1]अर्थात् हामी तिम्रो निम्ति दुई नराम्रो कुरामध्ये एउटा नराम्रो कुराको प्रतिक्षा गरिराखेका छौं कि या त आकाशबाट अल्लाह तआलाले प्रकोप उतारोस् जसमा तिमी नष्ट भएर जाउ अथवा हाम्रै हातहरुबाट अल्लाह तआलाले तिमीलाई (वध गर्ने, अथवा बन्दी बनाउने आदि प्रकारका) दण्ड दिलाओस् । त्यो दुबै कुराको सामर्थ्य राख्दछ ।

[2](أنفقوا) आदेश हो परन्तु यहाँ यस वाक्यको अर्थ यो हो कि यदि तिमी खर्च गर्दछौ भने स्वीकार गरिने छैन । अथवा यो सूचक वाक्यको अर्थमा छ । अर्थ यो हो कि दुबै कुरा समान छन्, खर्च गर अथवा नगर । आफ्नो इच्छाले अल्लाहको मार्गमा खर्च गर्छौ भने तैपनि अस्वीकार छ । किनभने स्वीकार गर्नुको प्रथम शर्त ईमान हो र त्यही तिमीमा छैन तथा अप्रसन्नताले खर्च गरिएको माल अल्लाहकहाँ त्यसै अस्वीकृत हुन्छ, किनभने त्यहाँ उचित उद्देश्य उपस्थित छैन, जुन स्वीकार गर्नको लागि आवश्यक छ । यो आयत पनि यसैप्रकार छ जस्तो यो छ ।

﴿ اسْتَغْفِرْ لَهُمْ أَوْ لَا تَسْتَغْفِرْ لَهُمْ ﴾

"तपाईं यिनीहरूका लागि क्षमा माँग्नुस् अथवा नमाँग्नुस् ।" (सूरः अल-तौबः-८०) अर्थात् दुबै कुरा समान छन् ।

[3]यसमा उनका दानलाई अस्वीकार गरिनुका तीन कारण भनिएका छन् । प्रथम उनको अविश्वास तथा अवज्ञा, द्वितीय नमाज़मा अल्छीपना । यसकारण कि उनीहरू यसमा न पुण्यको आशा राख्दछन् तथा न उनलाई त्यसको दण्डको

(५५) अतः तपाईंलाई उनका धन तथा सन्तान आश्चर्यमा नपारुन् ।[1] अल्लाह यही चाहन्छ कि उनीहरूलाई सांसारिक जीवनमा नै दण्ड देओस् ।[2] तथा उनको अविश्वासको अवस्थामा नै उनका प्राण निस्कून् ।[3]

فَلَا تُعۡجِبۡكَ أَمۡوَٰلُهُمۡ وَلَآ أَوۡلَٰدُهُمۡۚ إِنَّمَا يُرِيدُ ٱللَّهُ لِيُعَذِّبَهُم بِهَا فِي ٱلۡحَيَوٰةِ ٱلدُّنۡيَا وَتَزۡهَقَ أَنفُسُهُمۡ وَهُمۡ كَٰفِرُونَ ۝٥٥

कुनै भय छ किनकि आशा तथा भय, यी पनि ईमानका लक्षण हुन्, जसबाट यिनीहरू बञ्चित छन् । तथा तृतीय अनिच्छाले खर्च गर्नु, तथा जुन काममा हृदयको प्रसन्नता हुँदैन, त्यो स्वीकार कुन प्रकार हुनसक्छ ? अतः यी तीनवटै कारण यस्ता छन् कि यिनीमध्ये एउटा-एउटा कारण पनि कर्मलाई अस्वीकारको लागि पर्याप्त छ । यदि यी तीनटै कारण जहाँ एकत्रित छन्, त त्यस वास्ता नगरिएको कर्मलाई अल्लाहको दरबारमा कुन प्रकार स्वीकृति प्राप्त हुनसक्छ ।

[1]यसकारण कि यी सबै परीक्षाका रूपमा छन् । जस्तो कि अल्लाहको आदेश छः

﴿ وَلَا تَمُدَّنَّ عَيۡنَيۡكَ إِلَىٰ مَا مَتَّعۡنَا بِهِۦٓ أَزۡوَٰجٗا مِّنۡهُمۡ زَهۡرَةَ ٱلۡحَيَوٰةِ ٱلدُّنۡيَا لِنَفۡتِنَهُمۡ فِيهِۚ ﴾

"तथा कैयन् प्रकारका मानिसहरूलाई जुन हामीले सांसारिक जीवनमा सुख-सुविधा वस्तुहरुबाट परिपूर्ण गरेका छौं, ताकि उनका परीक्षा लिइयोस्, उनीतिर नहेर्नुस् ।" (सूरः ताहा-१३१) तथा आदेश गर्‍यो :

﴿ أَيَحۡسَبُونَ أَنَّمَا نُمِدُّهُم بِهِۦ مِن مَّالٖ وَبَنِينَ ۞ نُسَارِعُ لَهُمۡ فِي ٱلۡخَيۡرَٰتِۚ بَل لَّا يَشۡعُرُونَ ﴾

"के यिनीहरू विचार गर्दछन् कि हामी संसारमा उनलाई जुन धन तथा पुत्रबाट सहायता दिन्छौं (त त्यसबाट) उनको भलाईमा हामी शीघ्रता गरिराखेका छौं ? (होइन) वरु यिनीहरू बुझ्दै-बुझ्दैनन् ।" (सूरः अल-मोमिनून-५५ तथा ५६)

[2]इमाम इब्ने कसीर तथा इमाम इब्ने जरीर तबरीले यसबाट ज़कात तथा अल्लाहको मार्गमा दान गर्नु तात्पर्य निकालेका छन् । अर्थात् यी मुनाफ़िकहरु (अवसरवादी) बाट ज़कात तथा दान त (जुन उनी मुसलमान प्रदर्शित गर्नको लागि दिन्छन्) संसारमा स्वीकार गरियून् ताकि यसप्रकारले उनीहरूलाई संसारमा धनको मार पनि दिइयोस् ।

[3]अन्त्यमा उनको मृत्यु अधर्मको अवस्थामा हुनेछ, यसकारण कि उनीहरू अल्लाहको पैग़म्बरलाई साँचो हृदयले स्वीकार गर्न तयार छैनन् तथा आफ्नो विश्वास तथा द्वयवादमा नै अडिग तथा दृढ छन् ।

وَيَحْلِفُونَ بِاللَّهِ إِنَّهُمْ لَمِنكُمْ وَمَا هُم مِّنكُمْ وَلَٰكِنَّهُمْ قَوْمٌ يَفْرَقُونَ ﴿٥٦﴾

(५६) तथा यिनीहरू अल्लाहको कसम खाई-खाई भन्दछन् कि यिनीहरू तिम्रो समूहका व्यक्तिहरु हुन्, यद्यपि यिनीहरू तिम्रैं होइनन्, कुरो मात्र यति छ कि यिनीहरू काँतर (त्रस्त) हुन् ।[1]

لَوْ يَجِدُونَ مَلْجَأً أَوْ مَغَارَاتٍ أَوْ مُدَّخَلًا لَّوَلَّوْا إِلَيْهِ وَهُمْ يَجْمَحُونَ ﴿٥٧﴾

(५७) यदि यिनीहरू कुनै सुरक्षित ठाउँ अथवा कुनै गुफा अथवा कुनै ठाउँ टाउको लुकाउन पाउँछन् भने अहिले नै त्यतैतिर सोझै फर्कि तीव्र गतिले भाग्नेछन् ।[2]

وَمِنْهُم مَّن يَلْمِزُكَ فِي الصَّدَقَاتِ فَإِنْ أُعْطُوا مِنْهَا رَضُوا وَإِن لَّمْ يُعْطَوْا مِنْهَا إِذَا هُمْ يَسْخَطُونَ ﴿٥٨﴾

(५८) उनीहरूमध्ये ती पनि छन् जो दानको मालको बाँडफाँडको विषयमा तपाईंमथि लाञ्छना लगाउँछन् ।[3] यदि त्यसमध्येबाट उनलाई प्राप्त हुन्छ भने प्रसन्न हुन्छन् तथा यदि त्यसमध्येबाट प्राप्त भएन भने तुरुन्तै क्रोधित हुन थाल्छन् ।[4]

[1]यस भयका कारण मिथ्या शपथ ग्रहण गरी यो प्रमाणित गर्न चाहन्छन् कि हामी पनि तिमी मध्येका नै हौं ।

[2]अर्थात् अति तीव्र गतिले दगुरी उनी ती सुरक्षित स्थानहरुमा गईहालून्, यसकारण तिमीसित यिनको जतिपनि सम्बन्ध छ, त्यो प्रेम तथा निःस्वार्थको होइन, द्वेष, ईर्ष्या तथा घृणामा छ ।

[3]यो उनको एउटा अन्य ठूलो दोषको वर्णन हो कि उनी नबी करीम सल्लल्लाहु अलैहि वसल्लमको प्रशस्त व्यक्तिलाई (نعوذ بالله) दान तथा युद्धमा प्राप्त सामग्रीको विभाजनमा अन्यायकारी भन्दथे । जुनप्रकार इब्ने जिलखुवैसरःको विषयमा वर्णित छ कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम एक पटक बाँडिराख्नु भएको थियो, जबकि उसले भन्यो, "न्यायसित काम लिनुस् ।" उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "अफसोच छ तिमीमाथि, यदि म नै न्याय गर्दिन भने अन्य कसले गर्नेछ ?" अल हदीस (सहीह बुखारी संख्या ६१६३ तथा सहीह मुस्लिम संख्या ७४४)

[4]अर्थात् यसप्रकारको अभियोग लगाउनुको उद्देश्य मात्र धनको लाभ प्राप्त गर्नु थियो कि यसप्रकार उनीहरूबाट भयका कारण उनीहरूलाई अधिक धन प्राप्त हुनेछ, अथवा उनी अधिकारी होऊन् अथवा न होऊन् परन्तु भाग उनीहरूलाई अवश्य प्राप्त हुनेछ ।

وَلَوْ أَنَّهُمْ رَضُوا مَا آتَاهُمُ اللَّهُ وَرَسُولُهُ وَقَالُوا حَسْبُنَا اللَّهُ سَيُؤْتِينَا اللَّهُ مِن فَضْلِهِ وَرَسُولُهُ إِنَّا إِلَى اللَّهِ رَاغِبُونَ ﴿٥٩﴾

(५९) यदि उनीहरू अल्लाह तथा त्यसको रसूलबाट दिइएका कुरामाथि प्रसन्न रहन्थे तथा भन्थे कि अल्लाह हामीलाई पर्याप्त छ, अल्लाहले हामीलाई आफ्नो कृपाले दिनेछ तथा त्यसका रसूल पनि। हामी त अल्लाहसित नै आशा राख्नेहरू हौं।

إِنَّمَا الصَّدَقَاتُ لِلْفُقَرَاءِ وَالْمَسَاكِينِ وَالْعَامِلِينَ عَلَيْهَا وَالْمُؤَلَّفَةِ قُلُوبُهُمْ وَفِي الرِّقَابِ وَالْغَارِمِينَ وَفِي سَبِيلِ اللَّهِ وَابْنِ السَّبِيلِ فَرِيضَةً مِّنَ اللَّهِ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٦٠﴾

(६०) दान मात्र भिक्षुहरुका[1] लागि हुन् तथा निर्धनहरुका लागि तथा उनीहरूका लागि जो यस काममा नियुक्त छन्। र उनका लागि जसका हृदयहरु आकृष्ट भएका हुन् (सत्यतिर) तथा दासमुक्ति एवं ऋणिहरुका लागि तथा अल्लाहको मार्गमा खर्च गर्न तथा यात्रीहरुका लागि,[2] (यो) अल्लाहको तर्फबाट अनिवार्य छ तथा अल्लाह सर्वज्ञ, विवेककारी छ।

---

[1]यस आयतमा त्यस अभियोगको द्वार बन्द गर्नको लागि दान पाउने योग्य मानिसहरूको वर्णन गरिदैछ। यहाँ दानसित तात्पर्य अनिवार्य दान अर्थात ज़कात हो। आयतको प्रारम्भ ( إنّما ) बाट गरिएको छ, जसले सीमित रूप गर्नुको अर्थ दिन्छ। तथा ( الصدقات ) मा अरबी भाषाको अक्षर (अलिफ़ लाम) वस्तुको साधारणताको लागि हो। अर्थात् धन, दान यिनै आठ प्रकारहरुमा सीमित छन्, जसको चर्चा आयतमा छ। यिनका अतिरिक्त ज़कातको धन कुनै अन्य प्रयोगमा ल्याउनु उचित छैन। विद्वानहरुमा यस कुरोमा मतभेद छ कि यी आठै प्रकारलाई दिनु आवश्यक छ अथवा यिनीमध्ये जुन प्रकारको लागि अति आवश्यक हुन्छ, तिनीमध्येबाट एउटा अथवा अन्यलाई जसमा इमाम अथवा विभाजनकारी उचित तथा आवश्यक ठान्दछ आवश्यकता अनुसार खर्च गरोस्। इमाम शाफई आदि पहिला मतका पक्षमा छन् कि ज़कातको राशिलाई बिना कुनै सोच-विचार गरी आठ भागहरुमा विभाजित गर्नुपर्ने छ, अनि आठै वटा ठाउँमा अलि-अलि खर्च गरियोस् तथा इमाम मालिक एवं इमाम अबू हनीफ़ा आदि दोस्रो मतका पक्षमा छन् कि आवश्यकता तथा हितलाई ध्यानमा राख्नु आवश्यक छ, जुन कार्यमा खर्च गर्नुको आवश्यकता अधिक छ तथा परि स्थितिका अनुसार जति उनको आवश्यकता अधिक छ, त्यति ज़कातको राशि तिनीमाथि व्यय गरिनेछ, चाहे अरु कार्यहरुका लागि राशि बचोस् अथवा नबचोस् यस विचारमा जुन औचित्य छ त्यो प्रथम विचारमा छैन।

[2]यी आठ प्रयोजनहरुमा खर्च गर्नुको संक्षिप्त विवरण यसप्रकार छ। (१,२) भिखारी तथा निर्धन लगभग नजीक-नजीक छ तथा एउटा अर्थ दोस्रोसित मिल्दोजुल्दो छ अर्थात

निर्धनलाई भिखारी तथा भिखारीलाई निर्धन भनिहालिन्छ। यसकारण यिनको अलग-अलग परिभाषामा धेरै मतभेद छ। तर दुबैको भावार्थमा यो कुरो त स्पष्ट छ कि जसलाई आवश्यकता छ तथा आफ्नो आवश्यकतालाई पूरा गर्नको लागि आवश्यक धन तथा साधनबाट बञ्चित छन्, तिनलाई भिखारी तथा निर्धन भनिन्छ। निर्धनको परिभाषाको निम्ति हदीसमा चर्चा छ। नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "निर्धन त्यो होइन जो एउटा-एउटा, दुई-दुईटा गाँस अथवा खजूरको लागि घर-घरमा जान्छ, बरु निर्धन त्यो हो जसको पासमा यति धन पनि छैन कि त्यो आफ्नो आवश्यकता पूरा गरोस्, न आफ्नो मुखमा यसप्रकारको आभास पनि उत्पन्न हुन देओस् कि मानिसहरू उसलाई निर्धन तथा आवश्यकताको योग्य ठानेर दान गरुन् तथा न अरुहरूका समक्ष हात फैलाऊन।" (सहीह बुख़ारी किताबुज़ ज़कात) हदीसमा यसप्रकार निर्धन, वर्णित व्यक्तिलाई नै बनाइएको छ। अन्यथा आदरणीय इब्ने अब्बास आदिबाट निर्धनको यो परिभाषा भनिन्छ कि जो हात फैलाउने होस्, घुमिफिरी अन्य मानिसहरूका पछि लागेर माँग्दछ तथा भिखारी त्यो हो जो निर्धन हुनुको उपरान्त छल गर्नुबाट बचोस् तथा मानिसहरूसित कुनै वस्तुको प्रश्न नगरोस्। (इब्ने कसीर) (३) कार्यकर्तासित तात्पर्य सरकारी कर्मचारी हुन्, जो ज़कात र दानको राशि वसूल गर्छन् तथा बाँड्दछन् तथा त्यसको लेखाजोखा राख्दछन्। (४) आकर्षित हृदय एक त ती काफ़िरहरु हुन्, जो अलि-अलि इस्लामतिर आकृष्ट हुन्छन् तथा उनको सहायता गर्नुमा यो आशा होस् कि उनी मुसलमान भइहाल्ने छन्। दोस्रो नयाँ मुसलमानहरू हुन् जसलाई इस्लाममा दृढताले स्थित रहनुको लागि सहायताको आवश्यकता होस्। तेस्रो ती मानिसहरू पनि हुन् जसको सहायता गर्नाले यो आशा होस् कि उनी आफ्ना क्षेत्रका व्यक्तिहरुलाई मुसलमानहरुमाथि आक्रमण गर्नबाट रोक्नेछन् तथा यसप्रकार उनी निकटवर्ती कमजोर मुसलमानहरुको रक्षा गर्नेछन्। यो र यसप्रकारका अन्य अवस्थाहरु हृदय आकृष्ट गर्नेलाई हुन्, जसमा ज़कातको राशि खर्च गर्न सकिन्छ, चाहे वर्णित व्यक्तिहरु धनवान् नै किन नहोऊन्। केही मानिसहरूका अनुसार यो प्रयोग समाप्त भइसकेको छ तर यो कुरो ठिक होइन। परिस्थितिहरु तथा समय अनुसार हर कालमा यस कर्तब्यमा ज़कातको राशि खर्च गर्नु उचित छ। (५) गर्दनहरु स्वतन्त्र गराउनको लागि। केही विद्वानहरुले केवल सम्बन्धित दासलाई लिएका छन्। तथा अन्य विद्वानहरुले सम्बन्धित तथा असम्बन्धित दुबै प्रकारका दास लिएका छन्, इमाम शौकानीले यसै विचारलाई प्रधानता दिएका छन्। (६) ऋणीबाट एक त ती ऋणीहरुको तात्पर्य हो जो आफ्ना परिवारको जीवन-यापन तथा जीवनका आवश्यकताको पूर्ति गर्दा अन्य मानिसहरूका ऋणका बोझमा थिचिएका हुन्छन् तथा उनीसित धन राशि पनि छैन तथा यस्तो सामान पनि छैन जसलाई बेचेर त्यस ऋणलाई चेकाउन सकन्। अर्का ती जिम्मेवार जसले कुनै अन्यको जमानत दिएका हुन् तथा त्यस पश्चात उनी त्यसको भक्तानीका लागि जिम्मेवार बनाइएका होऊन् अथवा कसैको फसल नष्ट भएको होस् अथवा व्यापारमा हानि भएको होस् र यसकारण हुन गएको होस् यी सबैलाइ

وَمِنْهُمُ الَّذِينَ يُؤْذُونَ النَّبِيَّ وَيَقُولُونَ هُوَ أُذُنٌ ۚ قُلْ أُذُنُ خَيْرٍ لَّكُمْ يُؤْمِنُ بِاللَّهِ وَيُؤْمِنُ لِلْمُؤْمِنِينَ وَرَحْمَةٌ لِّلَّذِينَ آمَنُوا مِنكُمْ ۚ وَالَّذِينَ يُؤْذُونَ رَسُولَ اللَّهِ لَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٦١﴾

(६१) तथा उनीहरूमध्ये यस्ता पनि छन् जो पैग़म्बर (सन्देशवाहक) लाई कष्ट दिन्छन् तथा भन्दछन् कि त्यो निरा कान छ । (तपाईं) भनिदिनुस् कि ती कान तिम्रो भलोका निम्ति हुन् ।[1] त्यो अल्लाहमा ईमान राख्दछ तथा मुसलमानहरुका कुराको विश्वास गर्दछ तथा तिमीमध्ये जो ईमान भएका हुन् यो उनका लागि कृपा हो, र रसूलुल्लाह (अल्लाहका दूत) लाई जो कष्ट दिन्छन् उनका लागि दुखदायी यातना छ ।

يَحْلِفُونَ بِاللَّهِ لَكُمْ لِيُرْضُوكُمْ وَاللَّهُ وَرَسُولُهُ أَحَقُّ أَن يُرْضُوهُ إِن كَانُوا مُؤْمِنِينَ ﴿٦٢﴾

(६२) उनीहरू मात्र तिमीलाई प्रसन्न गर्नका लागि तिम्रो समक्ष अल्लाहको कसम खान्छन् यदि यिनी ईमान्दार भएको भए अल्लाह तथा त्यसको रसूललाई प्रसन्न गरिनुका अधिक अधिकारी हुन्थे ।

ज़कातको राशिबाट सहायता गर्नु उचित छ । (७) अल्लाहको मार्गबाट तात्पर्य धर्मयुद्ध हो अर्थात् युद्धको सामग्री तथा आवश्यकताहरु एवं मुजाहिद (चाहे त्यो मालदार नै किन नहोस्) माथि ज़कातको राशि खर्च गर्न उचित छ । तथा हदीसहरुमा वर्णित छ कि हज तथा उमर: पनि अल्लाहको मार्गमा नै आउँछ । यसैप्रकार केही विद्वानहरुका निकट तबलीग़ (निमन्त्रण तथा आमन्त्रण) पनि अल्लाहको मार्गमा सम्मिलित छ किनकि यसको पनि उद्देश्य अल्लाहको कथनलाई जन-जन सम्म पुऱ्याउनु हो । (८) मार्गका मानिसहरूसित तात्पर्य यात्री हुन् अर्थात् कोही पनि व्यक्ति यात्राको समय सहायताको पात्र भएको छ भने चाहे त्यो आफ्नो देशमा धनवान नै किन नहोस्, उसको सहायता ज़कातको राशिबाट गर्न सकिन्छ ।

[1]यहाँबाट पुन: मुनाफ़िकहरु (द्वयवादिहरु) को चर्चा भइरहेको छ । नबी सल्लल्लाहु अलैहि वसल्लमका विरुद्ध एउटा लाञ्छना उनीहरूले यो लगाए कि यो कानको कच्चा (अथवा हल्का) छ । अर्थ यो हो कि यो हर व्यक्तिको कुरा सुन्दछ (अर्थात् यो उहाँ सल्लल्लाहु अलैहि वसल्लमको ज्ञान तथा कृपा एवं क्षमा गर्नुका विशेषताहरुबाट उनीहरूलाई धोका भयो) । अल्लाहबाट आदेश भयो कि होइन, हाम्रो पैग़म्बर उपद्रव तथा अशान्तिको कुनै कुरा सुन्दैन, जे पनि सुन्दछ, तिम्रो त्यसमा हित, पुण्य तथा भलाई छ ।

اَلَمْ يَعْلَمُوْٓا اَنَّهٗ مَنْ يُّحَادِدِ اللّٰهَ وَرَسُوْلَهٗ فَاَنَّ لَهٗ نَارَ جَهَنَّمَ خَالِدًا فِيْهَا ؕ ذٰلِكَ الْخِزْيُ الْعَظِيْمُ ﴿٦٣﴾

(६३) के उनीहरूलाई थाहा छैन कि जो पनि अल्लाहको तथा त्यसका रसूलको विरोध गर्नेछ त्यसको लागि निःसन्देह नरकको अग्नि छ, जसमा उनीहरू सधैं रहनेछन्, यो साह्रै ठूलो अपमान हो ।

يَحْذَرُ الْمُنٰفِقُوْنَ اَنْ تُنَزَّلَ عَلَيْهِمْ سُوْرَةٌ تُنَبِّئُهُمْ بِمَا فِيْ قُلُوْبِهِمْ ؕ قُلِ اسْتَهْزِءُوْا ۚ اِنَّ اللّٰهَ مُخْرِجٌ مَّا تَحْذَرُوْنَ ﴿٦٤﴾

(६४) अवसरवादिहरुलाई (हरेक समय) यो डर लागिरहन्छ कि कहीं (मुसलमानहरू) माथि कुनै आयत नउत्रोस्, जसले उनका हृदयका कुरा उनलाई भनिदेओस् । भनिदिनुस् कि तिमी उपहास गर्दै गर । निःसन्देह अल्लाह तआला त्यसलाई व्यक्त गर्नेछ जसबाट तिमी भयभीत छौ ।

وَلَئِنْ سَاَلْتَهُمْ لَيَقُوْلُنَّ اِنَّمَا كُنَّا نَخُوْضُ وَنَلْعَبُ ؕ قُلْ اَبِاللّٰهِ وَاٰيٰتِهٖ وَرَسُوْلِهٖ كُنْتُمْ تَسْتَهْزِءُوْنَ ﴿٦٥﴾

(६५) यदि तपाईं उनीसित सोध्नुहुन्छ भने त स्पष्ट भनिदिनेछन् कि हामी त त्यतिकै आपसमा हाँसो-मज़ाक गरिराखेका थियौं । भन्नुस् कि अल्लाह, त्यसका आयत तथा त्यसको रसूल नै तिम्रो हाँसो उपहासको लागि शेष रहेका छन् ?[1]

[1]मुनाफ़िक (अवसरवादी) अल्लाहका आयतको उपहास गर्दथे, निष्ठावानहरुको अपमान गर्दथे, यहाँसम्मकि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको विषयमा अपशब्दको प्रयोग गर्नमा संकोच गर्दैनथे, जसको सूचना कुनै प्रकारले मोमिनहरु तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई हुने गर्दथ्यो, तर यदि उनीसित सोधिन्थ्यो भने प्रष्टरुपले इन्कार गरिदिन्थे तथा भन्थे कि हामी त आपसमा यसरी हाँसो-ख्याल गरिराखेका थियौं । अल्लाह तआलाले भन्नुभयो, “हाँसो-ख्यालको लागि तिम्रा समक्ष अल्लाह तथा त्यसका आयत एवं त्यसका रसूल नै शेष रहेका छन् ?” अर्थ यो हो कि यदि तिम्रो उद्देश्य आपसमा हाँसो-ख्यालको भएको भए त्यसमा अल्लाह, त्यसका आयत तथा रसूलमध्येमा किन आउँथे ? यो निःसन्देह त्यस द्वेष तथा ईर्ष्याको संकेत हो, जुन अल्लाहका आयतहरु तथा हाम्रा पैग़म्बरका विरुद्ध तिम्रा हृदयमा स्थित छन् ।

(६६) तिमी बहाना नबनाउ, नि:सन्देह तिमी आफ्नो ईमान ल्याए पश्चात बेईमान भयौ ।[१] यदि हामी तिमीमध्ये केही व्यक्तिहरुलाई क्षमा पनि गरिदिन्छौं भने,[२] केहीलाई उनको अपराधको कठोर दण्ड पनि दिनेछौं ।[३]

لَا تَعْتَذِرُوْا قَدْ كَفَرْتُمْ بَعْدَ اِيْمَانِكُمْ ؕ اِنْ نَّعْفُ عَنْ طَآئِفَةٍ مِّنْكُمْ نُعَذِّبْ طَآئِفَةًۢ بِاَنَّهُمْ كَانُوْا مُجْرِمِيْنَ ﴿٦٦﴾

(६७) सबै मुनाफ़िक़ (अवसरवादी) पुरुष तथा स्त्रीहरू एक समान नै हुन् ।[४] यी नराम्रा कुराको आदेश दिन्छन् तथा राम्रा कुराबाट रोक्दछन् तथा आफ्ना मुट्ठी बन्द राख्दछन् ।[५] यिनीहरूले अल्लाहलाई बिर्सिदिए

اَلْمُنٰفِقُوْنَ وَالْمُنٰفِقٰتُ بَعْضُهُمْ مِّنْۢ بَعْضٍ ۘ يَاْمُرُوْنَ بِالْمُنْكَرِ وَيَنْهَوْنَ عَنِ الْمَعْرُوْفِ وَيَقْبِضُوْنَ اَيْدِيَهُمْ ؕ نَسُوا اللّٰهَ

[१]अर्थात् तिमीहरू जुन ईमान प्रदर्शित गर्दै आएका छौ, अल्लाह तथा त्यसको रसूलको उपहास पश्चात त्यसको कुनै महत्व छैन । प्रथम त त्यो पनि भ्रष्टाचार मै आधारित थियो । त्यसैकारण तिम्रो गणना मुसलमानहरूमध्ये हुन्थ्यो, परन्तु अब त्यसको पनि स्थान समाप्त भयो ।

[२]यसबाट तात्पर्य यस्ता व्यक्ति हुन्, जसलाई आफ्नो त्रुटिको आभास भयो तथा उनीहरूले क्षमा-याचना गरे एवं नि:स्वार्थी मुसलमान बने ।

[३]यी यस्ता मानिसहरू हुन् जसलाई तौबाको सौभाग्य प्राप्त भएन तथा अधर्म एवं भ्रष्टाचारमा लिप्त रहे । यसैले त्यस यातनाको कारण पनि भनिएको छ कि उनी अपराधी हुन् ।

[४]स्वार्थी जो कसम खाएर मुसलमानहरूलाई विश्वास दिलाउने गर्दथे कि "हामी तिमी मध्येका नै हौं ।" अल्लाह तआलाले यसको खण्डन गर्‍यो कि ईमानहुनेहरुसित उनको के सम्बन्ध ? तर यी सबै अवसरवादी चाहे पुरुष होऊन् अथवा स्त्रीहरु एक समान नै छन् अर्थात् कुफ्र तथा भ्रष्टाचारमा एक-अर्काभन्दा कम छैनन् । अगाडी उनका दुर्गुणहरुलाई व्यक्त गरिँदैछ, जुन ईमान भएकाहरुका गुणहरूको बिल्कुलै प्रतिकूल तथा विपरीत छन् ।

[५]यसबाट तात्पर्य कन्जुसी हो अर्थात निष्ठावानहरूको विशेषता अल्लाहको मार्गमा खर्च गर्नु हो तथा यसको विपरीत पाखण्डीको कन्जुसी हो अर्थात् अल्लाहको मार्गमा खर्च गर्न संकोच गर्नु हो ।

فَنَسِيَهُمْ ۗ إِنَّ الْمُنَٰفِقِينَ هُمُ الْفَٰسِقُونَ ﴿٦٧﴾

अल्लाहले पनि यिनीहरूलाई बिर्सिदियो ।[1] निःसन्देह मुनाफ़िक (द्वयवादी) नै भ्रष्टाचारी हुन् ।

وَعَدَ اللَّهُ الْمُنَٰفِقِينَ وَالْمُنَٰفِقَٰتِ وَالْكُفَّارَ نَارَ جَهَنَّمَ خَٰلِدِينَ فِيهَا ۚ هِيَ حَسْبُهُمْ ۚ وَلَعَنَهُمُ اللَّهُ ۖ وَلَهُمْ عَذَابٌ مُّقِيمٌ ﴿٦٨﴾

(६८) अल्लाह तआ़लाले यी मुनाफ़िक (अवसरवादी) पुरुष, स्त्री तथा काफ़िरहरुसित नरकको आगोको वायदा (वचन) गरिसकेको छ, जहाँ यिनीहरू सधैं रहनेछन्, त्यही उनीहरूका लागि पर्याप्त छ, उनीमाथि अल्लाहको धिक्कार छ । तथा उनका लागि स्थाई यातना छ ।

كَالَّذِينَ مِن قَبْلِكُمْ كَانُوا أَشَدَّ مِنكُمْ قُوَّةً وَأَكْثَرَ أَمْوَٰلًا وَأَوْلَٰدًا فَاسْتَمْتَعُوا بِخَلَٰقِهِمْ فَاسْتَمْتَعْتُم بِخَلَٰقِكُمْ كَمَا اسْتَمْتَعَ

(६९) तिमीभन्दा पूर्वजनहरुका[2] समान जो तिमीभन्दा बलवान् तथा धन, सन्तानमा तिमीभन्दा अत्याधिक थिए त उनीहरूले आफ्नो धार्मिक भागको आनन्द लिए अनि तिमीले पनि आफ्नो भागको आनन्द लऊ ।[3] जस्तो तिमीभन्दा

[1]अर्थात् अल्लाहले पनि उनीसित यस्तो नै व्यवहार गर्नेछ जस्तो कि उसले उनीहरूलाई बिर्सिदियो । यसप्रकार अन्य ठाउँमा आदेश गऱ्यो :

﴿ الْيَوْمَ نَنسَاكُمْ كَمَا نَسِيتُمْ لِقَاءَ يَوْمِكُمْ هَٰذَا ﴾

"आज हामीले तिमीलाई त्यसैप्रकार बिर्सिदिनेछौं, जसरी तिमीले हाम्रो साक्षातकारको यस दिनलाई बिर्सेका थियौ ।" (सुरः अल-जासियः-३४)

अर्थ यो हो कि जसरी संसारमा उनीहरूले अल्लाहलाई छोडेका थिए । क़ेयामतका दिन अल्लाह तआ़लाले आफ्नो दया तथा कृपाबाट बञ्चित राख्नेछ । अतः (نسيان) (निस्यान) का सम्बन्ध अल्लाह तआ़लातिर ज्ञान शास्त्रमा नियमहरुका अनुसार समानताको रूपमा छ । अपितु अल्लाह तआ़ला बिर्सनुको दोषबाट पवित्र छ, अर्थात् त्यसको यो विशेषता हो कि त्यो कुनै पनि प्रकारले बिर्सन्न ।

[2]अर्थात तिम्रो दशा पनि कर्म तथा परिणामहरुको आधारमा पूर्वका समुदायका काफ़िरहरु जस्तो नै छ । अहिले अनुपस्थितिको सट्टा, मुनाफ़िकहरुलाई सम्बोधित गरिदैछ ।

[3](خلاق) को अन्य अनुवाद सांसारिक भाग पनि गरिएको छ । अर्थात् तिम्रो भाग्यमा दुनियाँको जति भाग लेखिदिएको छ, त्यसको आनन्द चाख जसरी तिमीभन्दा पूर्वका मानिसहरूले आफ्ना भागको स्वाद लिएका थिए । तथा पछि मरण अथवा यातनाबाट अलिङ्गित भए ।

كَالَّذِينَ مِن قَبْلِكُمْ ... بِخَلَاقِهِمْ وَخُضْتُمْ كَالَّذِي خَاضُوا ۚ أُولَٰئِكَ حَبِطَتْ أَعْمَالُهُمْ فِي الدُّنْيَا وَالْآخِرَةِ ۖ وَأُولَٰئِكَ هُمُ الْخَاسِرُونَ ﴿٦٩﴾

पूर्व मानिसहरू आफ्ना भागबाट लाभान्वित भएका थिए तथा तिमीले पनि त्यसैप्रकार हाँसो-ठट्टाको गफ गऱ्यौ जस्तो उनीहरूले गरेका थिए ।[१] उनका कार्य लोक-परलोकमा नष्ट भए तथा यिनै क्षतिग्रस्त हुन् ।[२]

أَلَمْ يَأْتِهِمْ نَبَأُ الَّذِينَ مِن قَبْلِهِمْ قَوْمِ نُوحٍ وَعَادٍ وَثَمُودَ وَقَوْمِ إِبْرَاهِيمَ وَأَصْحَابِ مَدْيَنَ وَالْمُؤْتَفِكَاتِ ۚ أَتَتْهُمْ رُسُلُهُم

(७०) के उनीहरूलाई आफूभन्दा पूर्वका मानिसहरूको समाचार पुगेन । नूह तथा आद एवं समूदका समुदाय तथा इब्राहीमका समुदाय एवं मदयनका निवासी र (उथल-पुथल गरिएका वस्तीहरुका) मानिसहरूका ?[३] तिनीहरू

[१]अर्थात अल्लाहका आयत तथा अल्लाहका पैग़म्बरहरुलाई झुठ्लाउनको लागि । अथवा अन्य भावार्थ यो हो कि संसारका साधनहरु तथा आनन्द एवं खेलकूदमा जुनप्रकार मग्न रहे, तिम्रो पनि त्यही दशा छ । आयतमा पूर्वका मानिसहरूसित तात्पर्य अहले किताब अर्थात् यहूदी तथा ईसाई हुन् । जस्तो कि एक हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "सौगन्ध छ त्यस अस्तित्वको जसका हातमा मेरो प्राण छ, तिमी आफूभन्दा पूर्वका मानिसहरूको अनुसरण अवश्य गर्नेछौ । पन्जासित पन्जा, बाहुसित बाहु तथा हातसित हात, यहाँसम्मकि यदि उनीहरू कुनै गोहीको गुफामा पसेका छन् भने तिमी पनि अवश्य पस्नेछौ ।" मानिसहरूले सोधे, "के यसबाट तपाईं सल्लल्लाहु अलैहि वसल्लमको तात्पर्य अहले किताब हुन् ।" उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो,"अन्य को त ?" (सहीह बुख़ारी)

[२](أولئک) सित तात्पर्य ती मानिसहरू हुन् जो उपरोक्त दोष तथा दुर्गुणहरुबाट युक्त हुन्छन् । जसरी उनीहरू हानियुक्त तथा असफल रहे, तिमी पनि उसैप्रकार रहनेछौ । यद्यपि शक्तिमा उनी तिमीभन्दा अधिक शक्तिशाली तथा धन तथा सन्तानमा पनि अधिक थिए । त्यसको उपरान्त पनि अल्लाहको प्रकोपबाट सुरक्षित रहन सकेनन्, त तिमी जो उनीभन्दा प्रत्येक क्षेत्रमा कम छौ, कसरी अल्लाहको पकडबाट बच्न सक्छौ ।

[३]यहाँ ती ६ समुदायहरुको वर्णन गरिएको छ, जसका स्थान सीरियामा रहेको छ । यो अरब क्षेत्रको निकट छ तथा उनका केही कुराहरु संभवत: उनीहरूले आफ्ना पूर्वजहरुबाट सुनेको पनि हुनसक्छ । नूहको समुदाय जुन जल प्रलयमा डुबाइयो, आदको समुदाय जुन सामर्थ्य तथा शक्तिमा श्रेष्ठमा हुनुका उपरान्त, तीब्र हावाहरुका गतिबाट नष्ट गरिए । समूदको समुदाय जसलाई आकाशको चित्कारले नष्ट गरिदियो, इब्राहीमको समुदाय जसको राजा नमरूद बिन कनआन बिन कोशलाई लामखुट्टेबाट मारियो । मदयनका निवासी (आदरणीय शुऐबका

بِالْبَيِّنٰتِ ۚ فَمَا كَانَ اللّٰهُ لِيَظْلِمَهُمْ وَلٰكِنْ كَانُوْٓا اَنْفُسَهُمْ يَظْلِمُوْنَ ۝

छेउ रसूल (ईशदूत) प्रमाणहरु लिएर पुगेका थिए,[1] अनि अल्लाह तआला यस्तो थिएन कि उनीमथि अत्याचार गर्दथ्यो, बरु उनीहरूले स्वयं नै आफूमाथि अत्याचार गरे ।[2]

وَالْمُؤْمِنُوْنَ وَالْمُؤْمِنٰتُ بَعْضُهُمْ اَوْلِيَآءُ بَعْضٍ ۘ يَاْمُرُوْنَ

(७१) मुसलमान पुरुष र स्त्रीहरू आपसमा एक-अर्काका (पक्षपाती सहायक तथा) मित्र हुन् ।[3] उनीहरू राम्रा कुराको

समुदाय) जसलाई चीत्कार, भूकम्प तथा बादलहरुका छायाँको प्रकोपले नष्ट गरियो । तथा तहस-नहस (उथल-पुथल) गरिएका मानिसहरूसित तात्पर्य लूतको समुदाय हो, जसका वस्तीको नाम "सदूम" थियो । (ائتكاف) को अर्थ हो तहस-नहस गरिदिनु । उनीमाथि एक त आकाशबाट ढुङ्गा बर्साइए, दोस्रो उनको वस्तीलाई माथि उठाएर तल फ्याँकियो, जसबाट सम्पूर्ण बस्ती तलमाथि भयो । यस आधारमा ती तलमाथि पारिएका मानिसहरुलाई "असहाब मुताफ़िक़ात" भनिन्छ ।

[1]यी सबै समुदायहरुको पासमा उनको पैग़म्बर, जो उनैको समुदायको एउटा पुरुष हुने गर्थ्यो, आए । परन्तु उनीहरूले तिनका कुरालाई कुनै महत्व दिएनन् । बरु झुठ्लाउने तथा द्वेषका मार्ग अपनाए, जसको परिणाम अन्त्यमा अल्लाहको प्रकोपका सामू आयो ।

[2]अर्थात् यो प्रकोप उनको निरन्तर अत्याचारको प्रतिफल हो । अकारण अल्लाहको प्रकोपका शिकार भएन ।

[3]मुनाफ़िक (द्वयवादी) का दुर्गुणहरुको तुलनामा मुसलमानहरूको सद्‌गुणहरुको चर्चा भइराखेको छ । प्रथम विशेषता उनीहरू एक-अर्काका मित्र, सहायक तथा दुखका साथीहरु हुन्, जुनप्रकार हदीसमा वर्णन छ ।

(الْمُؤْمِنُ لِلْمُؤْمِنِ كَالْبُنْيَانِ، يَشُدُّ بَعْضُهُ بَعْضاً)

"मोमिन, मोमिनको लागि एक भित्ता समान छ जसको एक ईंट दोस्रो ईंटको मजबुतीको साधन हो ।" (सहीह बुखारी किताबुस्सलात बाब तश्बीकिल असाबेअ फ़िल मस्जिदे व गैरेही र मुस्लिम बाब तराहुमुल मोमिनीन)

अर्को हदीसमा वर्णन छ ।

مَثَلُ الْمُؤْمِنِيْنَ فِيْ تَوَادِّهِمْ، وَتَرَاحُمِهِمْ، كَمَثَلِ الْجَسَدِ الْوَاحِدِ إِذَا اشْتَكَىٰ مِنْهُ عُضْوٌ، تَدَاعَىٰ لَهُ سَائِرُ الْجَسَدِ بِالْحُمَّىٰ وَالسَّهَرِ

بِالْمَعْرُوْفِ وَيَنْهَوْنَ عَنِ الْمُنْكَرِ وَيُقِيْمُوْنَ الصَّلٰوةَ وَيُؤْتُوْنَ الزَّكٰوةَ وَيُطِيْعُوْنَ اللّٰهَ وَرَسُوْلَهٗ ۭ اُولٰۗىِٕكَ سَيَرْحَمُهُمُ اللّٰهُ ۭ اِنَّ اللّٰهَ عَزِيْزٌ حَكِيْمٌ ۝

आदेश दिन्छन् तथा नराम्रा कुराहरुबाट रोक्दछन्,[1] नमाज़हरु नियमित रूपले पढ्दछन्, ज़कात दिन्छन्, अल्लाह तथा त्यसको रसूलको कुरा मान्दछन्,[2] यिनै मानिसहरू हुन्, जसमाथि अल्लाह (तआ़ला) अति शीघ्र कृपा गर्नेछ, नि:सन्देह अल्लाह विवेकी प्रभावी छ ।

وَعَدَ اللّٰهُ الْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا وَمَسٰكِنَ طَيِّبَةً فِيْ جَنّٰتِ عَدْنٍ ۭ وَرِضْوَانٌ مِّنَ اللّٰهِ اَكْبَرُ ۭ

(७२) यी ईमान्दार पुरुष तथा स्त्रीहरुसँग अल्लाह (तआ़ला) ले ती स्वर्गहरुको वायदा (वाचा) गरेको छ जसमा नहरहरु बगिराखेका छन्, जहाँ उनी सधैं बास गर्नेछन्, तथा ती स्वच्छ पवित्र भवनको,[3] जुन ती अनन्त स्वर्गमा छन्, तथा

"मोमिनको उदाहरण आपसमा एक-अर्कासँग प्रेम गर्नु तथा कृपा गर्नुमा एक शरीरको समान छ कि जब शरीरको एक अङ्गलाई दुख हुन्छ त सम्पूर्ण शरीरलाई ज्वरो हुन आउँछ तथा सजग रहन्छ ।" (सहीह मुस्लिम बाब मज़कूर तथा अल-बुखारी किताबुल आदाब बाब रहमतुन्नास वल बहाएम)

[1]यो मोमिनहरूको दोस्रो विशेष गुण हो (معروف) (मारूफ) त्यो हो जसलाई धर्म विधानले मारूफ (अर्थात् नेकी, पुण्य तथा भलाई) भनेको छ (مُنكر) (मुनकर) त्यो हो जसलाई धर्मविधानले मुनकर (अर्थात् नराम्रो) मानेको छ न कि त्यो जसलाई मानिसहरूले राम्रा वा नराम्रा भनून् ।

[2]नमाज़ अल्लाहका अधिकारहरुमा परम आराधना हो तथा ज़कात अन्य मानिसहरूको अधिकारमा विशेष स्थान राख्दछ, यसैकारण यी दुबैलाई विशेषरूपले वर्णन गरी भनिएको छ कि उनी प्रत्येक विषयमा अल्लाह तथा त्यसका रसूलका आदेशको पालना गर्दछन् ।

[3]जुन मोती तथा याकूत (पुलक) बाट तयार गरिएका हुनेछन् (عدن) का कैयन् अर्थ गरिएका छन् । एउटा अर्थ सधैं को हो ।

अल्लाहको प्रसन्नता सबभन्दा महान छ,[1] यही सबभन्दा ठूलो सफलता हो ।

ذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيْمُ ۝

(७३) हे नबी ! काफ़िर तथा पाखण्डीहरूसित धर्मयुद्ध जारी राख ।[2] तथा उनीहरूमाथि कडाई गर ।[3] उनको मूल स्थान नरक हो, जुन अत्याधिक नराम्रो ठाउँ हो ।[4]

يٰٓاَيُّهَا النَّبِيُّ جَاهِدِ الْكُفَّارَ وَالْمُنٰفِقِيْنَ وَاغْلُظْ عَلَيْهِمْ ۭ وَمَاْوٰىهُمْ جَهَنَّمُ ۭ وَبِئْسَ الْمَصِيْرُ ۝

[1]हदीस (रसूलको कथन) मा पनि वर्णित छ कि स्वर्गका सबै प्रदानहरुको पश्चात स्वर्गवासीहरुलाई सर्वोत्तम प्रदान अल्लाहको प्रसन्नताको रूपमा प्रदान हुनेछ । (सहीह बुख़ारी तथा मुस्लिम किताबुल रिकाक तथा किताबुल जन्न:)

[2]यस आयतमा नबी करीम सल्लल्लाहु अलैहि वसल्लमलाई काफ़िर तथा अवसरवादीहरुसित धर्मयुद्ध तथा उनीमाथि कडाई गर्नको आदेश दिईदैछ, नबी सल्लल्लाहु अलैहि वसल्लमको पश्चात यससँग सम्बन्धित उहाँ सल्लल्लाहु अलैहि वसल्लमका अनुयायी हुन् । काफ़िरहरूका साथ द्वयवादीहरुसित पनि जुन धर्मयुद्ध गर्ने आदेश छ, यसको विषयमा मतभेद छ । एक मत त यही छ कि यदि अवसरवादीको द्वयवाद तथा भ्रष्टता स्पष्ट हुन्छ भने उनीसित पनि त्यसैप्रकार धर्मयुद्ध गरियोस्, जुनप्रकारले काफ़िरहरुसित गरिन्छ । दोस्रो मत यो हो कि अवसरवादीहरुसित धर्मयुद्ध गर्नु यो हो कि उनीसित शिक्षा, भाषण तथा मुखले सम्झाइयोस् । अथवा उनीहरू सभ्यताका विरुद्ध अपराध गर्दछन् भने उनलाई दण्डित गरियोस् । तेस्रो मत यो हो कि धर्मयुद्धको आदेश काफ़िरहरुसित सम्बन्धित छ तथा कठोरता गर्नु पाखण्डीहरुको लागि । इमाम इब्ने कसीर भन्नुहुन्छ कि यी विचारहरुमा आपसमा कुनै भेद तथा विरोध छैन, यसकारण समय तथा परिस्थितिका अनुसार यिनीहरूमध्ये कुनै पनि मतको आधारमा काम गर्नुपर्दछ ।

[3](غِلْظَة) को विलोम (رأفة) हो, जसको अर्थ कोमलता तथा प्रेम गर्नु हो । यस आधारबाट (غِلْظَة) को अर्थ कडाई तथा बलपूर्वक शत्रुहरुको विरुद्ध कारवाही हो । मात्र मुखको कडा भाषणको तात्पर्य होइन । यसकारण कि त्यो त नबी करीम सल्लल्लाहु अलैहि वसल्लमको सद्व्यवहारको नै विरुद्ध हो, त्यसलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लम स्वयं नगर्न सक्थे न अल्लाहको तर्फबाट नै वहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई आदेश प्राप्त हुनसक्थ्यो ।

[4]धर्मयुद्ध तथा कठोरताको आदेशको सम्बन्ध संसारसित छ । आख़िरतमा उनका लागि नरक छ जुन सबैभन्दा नराम्रो ठाउँ हो ।

يَحْلِفُونَ بِاللَّهِ مَا قَالُوا ۚ وَلَقَدْ قَالُوا كَلِمَةَ الْكُفْرِ وَكَفَرُوا بَعْدَ إِسْلَامِهِمْ وَهَمُّوا بِمَا لَمْ يَنَالُوا ۚ وَمَا نَقَمُوا إِلَّا أَنْ أَغْنَاهُمُ اللَّهُ وَرَسُولُهُ مِنْ فَضْلِهِ ۚ فَإِنْ يَتُوبُوا يَكُ خَيْرًا لَهُمْ ۖ وَإِنْ يَتَوَلَّوْا يُعَذِّبْهُمُ اللَّهُ عَذَابًا أَلِيمًا

(७४) यिनीहरू अल्लाहको सौगन्ध खाएर भन्दछन् कि उनीहरूले भनेनन्, यद्यपि निःसन्देह कुफ्रको शब्द यिनका मुखबाट निस्किसकेको छ। तथा यिनीहरू इस्लाम स्वीकार गरे उपरान्त पनि नास्तिक भए।[1] तथा यिनीहरूले त्यस कार्यका निश्चय पनि गरेका छन्, जसलाई प्राप्त गर्न सकेनन्।[2] यिनीहरू केवल यसै कुराको बदला लिइराखेका छन् कि यिनीहरूलाई अल्लाहले आफ्नो कृपाले तथा यसका रसूलले धनवान बनाइदिए।[3] यदि यिनी अहिले

[1]व्याख्याकारहरुले यसको व्याख्यामा विभिन्न घटनाहरुको वर्णन गरेका छन्, जसमा अवसरवादिहरुल रसूल सल्लल्लाहु अलैहि वसल्लमको शानमा (मर्यादा) अपशब्द भने, जसलाई मुसलमानहरूले सुने तथा आएर रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम (सित भने परन्तु उहाँ सल्लल्लाहु अलैहि वसल्लमबाट सोध्दा साफ इन्कार गरिहाले, बरु सौगन्धसम्म खाए कि उनीहरूले यस्ता कुरा गरेनन् जस पश्चात यो आयत अवतरित भयो। यसबाट यो पनि ज्ञात भयो कि नबी सल्लल्लाहु अलैहि वसल्लमको शानमा अपमान गर्नु कुफ्र हो। नबी करीम सल्लल्लाहु अलैहि वसल्लमको शानमा अपशब्द भन्ने मानिस मुसलमान रहन सक्दैन।

[2]यसको विषयमा पनि केही घटनाहरुको वर्णन पाईन्छ जस्तै तबूकबाट फिर्ता हुँदाखेरि अवसरवादिहरुले रसूलुल्लाह स.अ.व.स.(सल्लल्लाहु अलैहि वसल्लम) का विरुद्ध षड्यन्त्र रचे जसमा उनी सफल हुन सकेनन् कि दस, बाह्र अवसरवादी एउटा घाटी (बेंसी) मा उहाँको पछि लागे जहाँ रसूलुल्लाह स.अ.व.स.(सल्लल्लाहु अलैहि वसल्लम) शेष सेनाबाट अलग्ग लगभग एक्लै गुज्रिराख्नु भएको थियो। उनीहरूको योजना यो थियो कि उहाँ स.अ.व.स.माथि आक्रमण गरी उहाँ स.अ.व.स.शेष सेनाबाट अलग लगभग एक्लै गुज्रिराख्नु भएको थियो। उनीहरूको योजना यो थियो कि उहाँ स.अ.व.स.माथि आक्रमण गरी उहाँ स.अ.व.स.को जीवनलाई नै समाप्त गरिदेऊन्। यसको सूचना प्रकाशना (वह्‌यी) द्वारा उहाँ स.अ.व.स.लाई अल्लाहले दियो, जसले गर्दा उहाँ स.अ.व.स.ले आफ्नो बचाव गर्नुभयो।

[3]मुसलमानहरूको हिज्‌रतका पश्चात मदीना नगरलाई केन्द्रीय अस्तित्व प्राप्त भयो, जसको कारणले त्यहाँ व्यापारको पनि उन्नति भयो, तथा मदिनाका निवासीहरुका आर्थिक परिस्थितिहरुमा प्रगति भयो। मदीनाका द्वयवादीहरुलाई पनि यसबाट लाभ भयो। अल्लाह तआला यस आयतमा यही भनिराख्नु भएको छ कि के ती मानिसहरूलाई यस कुराको अप्रसन्नता छ कि अल्लाहले उनलाई आफ्नो कृपाले धनवान बनाइदिएको छ? अर्थात यी

فِي الدُّنْيَا وَالْآخِرَةِ ۚ وَمَا لَهُمْ فِي الْأَرْضِ مِن وَلِيٍّ وَلَا نَصِيرٍ ﴿٧٤﴾

पनि क्षमा-याचना गर्छन् भने यो उनको पक्षमा राम्रो छ तथा यदि विमुख रहन्छन् भने अल्लाह (तआ़ला) उनीहरूलाई लोक-परलोकमा दुखदायी यातना दिनेछ। तथा समस्त धर्तीमा उनको कोही पक्षधर तथा सहायक भई उभिने छैन।

وَمِنْهُم مَّنْ عَاهَدَ اللَّهَ لَئِنْ آتَانَا مِن فَضْلِهِ لَنَصَّدَّقَنَّ وَلَنَكُونَنَّ مِنَ الصَّالِحِينَ ﴿٧٥﴾

(७५) यिनीहरूमध्ये ती पनि छन् जसले अल्लाहसित वाचा गरेका थिए कि यदि त्यसले हामीलाई आफ्नो कृपाले धन प्रदान गर्नेछ भने हामी अवश्य सत्कार गर्नेछौं तथा पूर्णरूपले पुनीतहरुमा हुनेछौं।

فَلَمَّا آتَاهُم مِّن فَضْلِهِ بَخِلُوا بِهِ وَتَوَلَّوا وَّهُم مُّعْرِضُونَ ﴿٧٦﴾

(७६) तर जब अल्लाहले आफ्नो कृपाले उनीहरूलाई प्रदान गऱ्यो त उनीहरू त्यसमा कन्जुसी गर्नथाले तथा आलटाल गरी मुख फर्काए।[1]

فَأَعْقَبَهُمْ نِفَاقًا فِي قُلُوبِهِمْ إِلَىٰ يَوْمِ يَلْقَوْنَهُ بِمَا أَخْلَفُوا اللَّهَ مَا وَعَدُوهُ وَبِمَا كَانُوا يَكْذِبُونَ ﴿٧٧﴾

(७७) त यसको दण्डस्वरूप अल्लाहले उनका हृदयमा द्वयवाद (कपट) हालिदियो, अल्लाहसित भेटका दिनहरुसम्म। यसकारण कि उनीहरूले अल्लाहसित गरिएका वाचाहरुको विरोध गरे तथा झूठो बोल्दै गरे।

---

अप्रसन्नता तथा क्रोधका कुरा होइनन्, बरु उनले त अल्लाहको कृतज्ञता व्यक्त गर्नु पर्दछ कि त्यसले उनीहरूलाई निर्धनताबाट निकाली सुसम्पन्न बनायो।

नोट :-अल्लाह तआ़लाको साथमा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको वर्णन यसकारण छ कि यस उन्नतिका स्पष्ट कारण तथा साधन रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम नै बन्नुभएको थियो अन्यथा वास्तवमा धनवान बनाउने त अल्लाह नै थियो। यसैकारण आयत (من فضله) मा एक वचन सर्वनाम छ कि अल्लाहले आफ्नो कृपाले उसलाई धनवान बनाइदियो।

[1]यस आयतलाई केही व्याख्याकारहरू एउटा सहाबी आदरणीय साअलबा बिन हातिब अन्सारीको विषयमा भन्दछन् तर प्रमाणको आधारमा यो सही छैन। सही कुरो यो हो कि यसमा पनि अवसरवादीहरुले एक अन्य कर्मको वर्णन गरेका छन्।

أَلَمْ يَعْلَمُوٓا۟ أَنَّ ٱللَّهَ يَعْلَمُ سِرَّهُمْ وَنَجْوَىٰهُمْ وَأَنَّ ٱللَّهَ عَلَّٰمُ ٱلْغُيُوبِ ﴿٧٨﴾

(७८) के यिनीहरू यो जान्दैनन् कि अल्लाह (तआ़ला) लाई उनका हृदयको रहस्य तथा उनका कानेखुसी सबैको ज्ञान छ तथा अल्लाह (तआ़ला) सबै गुप्त कुराहरुको जानकार छ ?[1]

ٱلَّذِينَ يَلْمِزُونَ ٱلْمُطَّوِّعِينَ مِنَ ٱلْمُؤْمِنِينَ فِى ٱلصَّدَقَٰتِ وَٱلَّذِينَ لَا يَجِدُونَ إِلَّا جُهْدَهُمْ فَيَسْخَرُونَ مِنْهُمْ ۙ سَخِرَ ٱللَّهُ مِنْهُمْ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٧٩﴾

(७९) जुन व्यक्तिले ती मुसलमानहरूमाथि आक्षेप गर्छन्, जो हृदय खोलेर दान गर्छन् तथा ती व्यक्तिहरुमाथि जसलाई आफ्ना मेहनत-मजदूरीका अतिरिक्त केही प्राप्त नै छैन, त यिनीहरू उनका उपहास गर्दछन्।[2] अल्लाह पनि उनीसित उपहास गर्दछ।[3] र उनीहरूका लागि दुखदायी यातना छ।

---

[1]यसमा ती अवसरवादीहरुका लागि कडा चेतावनी छ जो अल्लाह तआ़लासित (वाचा) गर्दछन् अनि त्यसको चिन्ता गर्दैनन्। जस्तो कि उनीहरू यो ठान्दछन् कि अल्लाह उनका गुप्त कुरा तथा रहस्यहरुलाई जान्दैन। यद्यपि कि अल्लाह सबै कुरो जान्दछ किनभने त्यो त अन्तर्यामी छ। सबै अप्रत्यक्ष कुराहरुलाई जान्दछ।

[2](الْمُطَّوِّعِينَ) को अर्थ हो जो आवश्यक दानका अतिरिक्त स्वेच्छाले अल्लाहको मार्गमा अधिक खर्च गर्दछन् (جُهْدَ) को अर्थ परिश्रम तथा प्रयत्न हो। अर्थात् ती व्यक्तिहरु जो धनवान त छैनन, तर यसको उपरान्त पनि आफ्नो परिश्रम तथा प्रयासको कमाई थोरै भएपनि अल्लाहको मार्गमा खर्च गर्दछन्। आयतमा पाखण्डीहरुको एउटा अन्य अत्यन्त कुरूप कर्मको वर्णन छ कि जब रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम युद्ध आदिको अवसरमा मुसलमानहरूसित चन्दाको लागि अपील गर्नुहुन्थ्यो त मुसलमान उहाँ सल्लल्लाहु अलैहि वसल्लमको अपीलमा आफ्ना सामर्थ्य अनुसार त्यसमा भाग लिन्थे। कसैको पासमा अधिक माल हुन्थ्यो, त्यसले अधिक दान दिन्थ्यो, जसको पासमा थोरै हुन्थ्यो, त्यसले थोरै दिन्थ्यो। पाखण्डी दुबै प्रकारको मुसलमानहरुको आलोचना गर्दथे। अधिक दिनेहरुको विषयमा भन्थे कि यो देखावटीपना हो तथा अभिमान हो तथा थोरै दिनेहरुलाई भन्थे कि तिम्रो यस मालबाट के बन्नेछ ? अथवा अल्लाह तआ़ला तिम्रो यस दानबाट निस्पृह छ। (सहीह बुख़ारी-१४१५ तथा मुस्लिम-७०६) यसप्रकार उनी मुसलमानहरूको उपहास गर्दथे।

[3]अर्थात् ईमान भएकाहरूसित उपहास गर्नुको प्रतिफल उनीहरूलाई यसप्रकार दिन्छ कि उनलाई अपमानित तथा निरादर गर्दछ। यो साहित्य शास्त्रको नियम हो कि कुनै अर्थको लागि त्यही शब्द प्रयोग गरिन्छ जुन पहिला आइसकेको छ। यस विधिलाई अरबी भाषामा "मुशाकलत" भनिन्छ, जस्तो यहाँ उपहासको प्रतिफलको

اِسْتَغْفِرْ لَهُمْ اَوْ لَا تَسْتَغْفِرْ لَهُمْ ؕ اِنْ تَسْتَغْفِرْ لَهُمْ سَبْعِيْنَ مَرَّةً فَلَنْ يَّغْفِرَ اللّٰهُ لَهُمْ ؕ ذٰلِكَ بِاَنَّهُمْ كَفَرُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ ؕ وَاللّٰهُ لَا يَهْدِي الْقَوْمَ الْفٰسِقِيْنَ ﴿٨٠﴾

(८०) तपाईं यिनीहरूका लागि क्षमा-याचना गर्नुस् अथवा नगर्नुस् । यदि तपाईं सत्तरी पटक पनि यिनका लागि क्षमा-याचना गर्नुहुन्छ तैपनि अल्लाहले यिनीहरूलाई कदापि क्षमा गर्ने छैन ।[1] यो यसकारण कि उनीहरूले अल्लाह तथा त्यसका रसूलप्रति कुफ्र गरेका छन् ।[2] र यस्ता भ्रष्टाचारीहरुलाई कृपालु अल्लाह मार्गदर्शन दिंदैन ।[3]

فَرِحَ الْمُخَلَّفُوْنَ بِمَقْعَدِهِمْ خِلٰفَ رَسُوْلِ اللّٰهِ وَكَرِهُوْٓا اَنْ يُّجَاهِدُوْا

(८१) पछाडी पर्नेवालाहरु रसूलुल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) जानुभए पश्चात

लागि उपहास (इस्तेहजा़) को शब्द प्रयोग गरिएको छ । अथवा यो श्राप हो कि अल्लाह तआ़लाले उनीहरूसित पनि यसैप्रकार उपहास गर्नेछ जुनप्रकार यिनीहरू मुसलमानहरुसँग उपहास गर्दछन् । (फ़तहुल क़दीर)

[1]सत्तरीको संख्या अतिश्योक्ति तथा अधिकताको लागि छ, कि चाहे जति अधिक उनको दोषमुक्तिको लागि विन्ती गर्नुहुन्छ, अल्लाह तआ़लाले उनलाई कदापि क्षमा गर्नेछैन । यसको अर्थ यो होइन कि यदि सत्तरीभन्दा अधिक पटक दोषमुक्तिका लागि विनय गरियो भने उनलाई क्षमा गरिदिइनेछ ।

[2]यहाँ क्षमाबाट बञ्चित गर्नुको कारण भनिएको छ, ताकि मानिसहरू कसैको सिफारिशको आशामा नरहून् बरु ईमान तथा पुण्य कर्मको धन लिएर अल्लाहका सदनमा उपस्थित होऊन् । यदि प्रलय सामग्री कसैको पासमा हुनेछैन भने यस्ता नास्तिक तथा अवज्ञाकारीहरुको कसैले सिफारिस पनि गर्नेछैन, यसकारण कि अल्लाह तआ़ला यस्ता मानिसहरूका लागि सिफारिशको आज्ञा नै प्रदान गर्नेछैन ।

[3]यस मार्गदर्शनसित तात्पर्य त्यो मार्गदर्शन हो, जसले मनुष्यलाई लक्ष्य (ईमान) सम्म पुर्‍याइदिन्छ अन्यथा मार्गदर्शनको वास्तविक अर्थ मार्ग देखाइदिनु हो । यसको प्रबन्ध त संसारमा प्रत्येक मुसलमान तथा काफ़िरको लागि गरिदिइएको छ

﴿ اِنَّا هَدَيْنٰهُ السَّبِيْلَ اِمَّا شَاكِرًا وَّاِمَّا كَفُوْرًا ﴾

"तथा हामीले त्यस (मानवगण) लाई सन्मार्ग देखाइ दिएका छौं या त कृतज्ञ होस् अथवा कृतघ्न बनोस् ।" (सूरः अल-दहर)

﴿ وَهَدَيْنٰهُ النَّجْدَيْنِ ﴾

"हामीले त्यस (मानव) लाई (राम्रो, नराम्रो) का दुबै मार्ग देखाइदिएका छौं ।" (सूरः अल-बलद-१०)

بِأَمْوَالِهِمْ وَأَنْفُسِهِمْ فِي سَبِيلِ اللَّهِ وَقَالُوا لَا تَنْفِرُوا فِي الْحَرِّ قُلْ نَارُ جَهَنَّمَ أَشَدُّ حَرًّا لَوْ كَانُوا يَفْقَهُونَ ﴿٨١﴾

आफूहरू बसिराखेको कुरोमा प्रसन्न छन् ।[1] उनीहरूले अल्लाहको मार्गमा आफ्नो धन तथा आफ्नो प्राणले धर्मयुद्ध गर्न अप्रिय माने तथा उनीहरूले भने कि यस गर्मीमा ननिस्क । भनिदिनुस् कि नर्कको आगो अत्याधिक गरम छ, काश, उनीहरूले बुझेको भए ।[2]

فَلْيَضْحَكُوا قَلِيلًا وَلْيَبْكُوا كَثِيرًا جَزَاءً بِمَا كَانُوا يَكْسِبُونَ ﴿٨٢﴾

(८२) अत: उनीहरू निकै कम हाँसून् तथा अधिक रोऊन्,[3] त्यसको प्रतिफल स्वरुप जुन यिनीहरूले गर्दथे ।

فَإِنْ رَجَعَكَ اللَّهُ إِلَىٰ طَائِفَةٍ مِنْهُمْ فَاسْتَأْذَنُوكَ لِلْخُرُوجِ فَقُلْ لَنْ تَخْرُجُوا مَعِيَ أَبَدًا وَلَنْ تُقَاتِلُوا مَعِيَ عَدُوًّا

(८३) त यदि अल्लाह तआलाले तपाईंलाई उनका कुनै गुट[4] तिर फर्काएर वापस ल्याओस्, अनि यिनीहरू तपाईंसित युद्धको मैदानमा निस्कनको लागि आज्ञा माँगून्,[5] तब तपाईं भनिदिनुस् कि तिमीहरू मसँग कदापि हिंड्न सक्दैनौ तथा न मेरो

---

[1]यो ती द्वयवादीहरुको चर्चा हो जो तबूकमा गएका थिएनन् तथा झूठा कारण भनेर रोक्नको लागि अनुमति लिइहाले । (خِلاف) को अर्थ हो, पछाडी अथवा विरोध अर्थात् उहाँ सल्लल्लाहु अलैहि वसल्लम जानु भए पश्चात उहाँ सल्लल्लाहु अलैहि वसल्लमको पछाडी अथवा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको विरोधमा मदीनामा बसिरहे ।

[2]अर्थात् यदि यिनलाई ज्ञात भएको भए कि नरकको अग्निको गर्मीको समक्ष संसारको गर्मी कुनै महत्व राख्दैन, त उनी कहिले पनि पछाडी रहँदैनथे । हदीसमा वर्णित छ कि संसारको यो आगो नरकको आगोको सत्तरीऔं भाग हो । अर्थात नरकको आगोको गर्मी संसारको आगोको गर्मीभन्दा ६९ गुना अधिक छ । (सहीह बुख़ारी, बदउल ख़ल्क) (اللّهُمَّ احفظنا منها)

[3]अर्थ यो हो कि यिनीहरू थोरै हाँस्नेछन् तथा धेरै रुनेछन् ।

[4]यसबाट तात्पर्य द्वयवादिहरुको गुट हो । अर्थात् यदि अल्लाह तआला तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई तबूकबाट मदीना वापस ल्याओस्, जहाँ यी पछाडी रहने मुनाफिक़हरु पनि छन् ।

[5]अर्थात् कुनै अन्य युद्धका लागि सँगै जानको लागि इच्छा व्यक्त गरुन् ।

إِنَّكُمْ رَضِيتُم بِالْقُعُودِ أَوَّلَ مَرَّةٍ فَاقْعُدُوا مَعَ الْخَالِفِينَ ﴿٨٣﴾

साथमा शत्रुसित लडाईं गर्न सक्दछौ । तिमीहरूले प्रथम पटक नै बसिरहनुलाई प्रिय ठानेका थियौ[1] तसर्थ तिमीहरू पछाडी परिराख्नेहरुमा नै बसिराख ।[2]

وَلَا تُصَلِّ عَلَىٰ أَحَدٍ مِّنْهُم مَّاتَ أَبَدًا وَلَا تَقُمْ عَلَىٰ قَبْرِهِ ۖ إِنَّهُمْ

(८४) तथा यिनीहरूमध्ये कसैको देहान्त हुन्छ भने त्यसको जनाज़ाको नमाज़ (अन्तिम संस्कारको) तपाईं कदापि नपढ्नुस् तथा न त्यसको कब्र (समाधि) निर उभिनुस् ।[3] यिनी

[1]यो भविष्यमा साथ नलैजानको कारण हो कि तिमी प्रथम पटक साथमा गएनौं, अतः अब तिमी यस योग्य छैनौं कि तिमीलाई कुनै युद्धमा सँगै लगियोस् ।

[2]अर्थात् अब तिम्रो दशा यही छ कि तिमी स्त्री, बच्चा तथा बृद्धाहरूको साथमा बसिराख, जो युद्ध गर्नुको साटो घरैमा बसिरहन्छन् । नबी करीम सल्लल्लाहु अलैहि वसल्लमलाई यो निर्देश यसकारण दिइएको छ ताकि उनका त्यस दुख तथा छोभ एवं पश्चातापमा अरु तीब्रता आओस्, जुन उनीहरू पछि पर्नुको कारण थियो ।

[3]यो आयत यद्यपि द्वयवादीहरुको प्रमुख अब्दुल्लाह बिन उबैयको विषयमा उत्रेको छ । परन्तु यसको आदेश सामान्य छ । प्रत्येक व्यक्ति जसको मृत्यु कुफ्र तथा द्वयवादको अवस्थामा भएको छ, त्यो त्यसमा सम्मिलित छ । यसको अवतरणको कारण यो हो कि अब्दुल्लाह बिन उबैयको मृत्यु भयो, त त्यसको पुत्र अब्दुल्लाह (जो मुसलमान तथा आफ्नो पिताको समनाम थिए) रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भए तथा भने कि एक त तपाईं सल्लल्लाहु अलैहि वसल्लम (प्रसाद स्वरूप) आफ्नो कमीज प्रदान गरिदिनुस् ताकि यसमा म आफ्नो पिताको कफन (शव वस्त्र) बनाइदिउँ । दोस्रो यो कि तपाईं सल्लल्लाहु अलैहि वसल्लम त्यसको नमाज जनाज़ा पढाइदिनुस् । उहाँ स.अ.व.स.ले कमीज प्रदान गर्नुभयो तथा नमाज़ पढाउनको लागि पनि जानुभयो । आदरणीय उमर (رضی اللہ عنہ) ले उहाँ सल्लल्लाहु अलैहि वसल्लमसित भन्नुभयो कि अल्लाह तआलाले तपाईं स.अ.व.स.लाई यस्ता मानिसहरूको नमाज़ पढाउनुबाट रोकेको छ, तपाईं सल्लल्लाहु अलैहि वसल्लम उसको पक्षमा दोष मुक्तिको प्रार्थना किन गर्नुहुन्छ ? उहाँ स.अ.व.स.ले भन्नुभयो, “अल्लाह तआलाले मलाई अधिकार दिएको छ अर्थात् रोकेको छैन । अल्लाह तआलाले भन्नुभएको छ कि यदि तिमी सत्तरी पटक पनि उनको दोष मुक्तिको लागि प्रार्थना गर्नेछौ भने अल्लाह तआला उनलाई क्षमा गर्ने छैन, त म उनको लागि सत्तरी पटकभन्दा बढी दोष मुक्तिको प्रार्थना गर्नेछु ।” अतः उहाँ स.अ.व.स.ले नमाज़ पढाउनुभयो जसमा अल्लाह तआलाले यो आयत उतारेर भविष्यमा मुनाफ़िकहरुको पक्षमा पूर्णतः निषेध

كَفَرُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ وَمَاتُوْا وَهُمْ فٰسِقُوْنَ ﴿٨٤﴾

अल्लाह तथा त्यसको रसूललाई अस्वीकार गर्नेहरू हुन् तथा मर्नेबेलासम्म कुकर्मी तथा अवज्ञाकारी रहँदै आएका छन्।[1]

وَلَا تُعْجِبْكَ اَمْوَالُهُمْ وَاَوْلَادُهُمْ ؕ اِنَّمَا يُرِيْدُ اللّٰهُ اَنْ يُّعَذِّبَهُمْ بِهَا فِي الدُّنْيَا وَتَزْهَقَ اَنْفُسُهُمْ وَهُمْ كٰفِرُوْنَ ﴿٨٥﴾

(८५) तथा तपाईंलाई यिनका धन तथा सन्तान अलिकति पनि मोहित नपारुन्। अल्लाह तआ़ला यही चाहन्छ कि उनीहरूलाई यी कुराहरुबाट संसारिक दण्ड देओस् तथा यी आफ्ना प्राण निस्कुनजेलसम्म काफ़िर (कृतघ्न) नै रहून्।

وَاِذَاۤ اُنْزِلَتْ سُوْرَةٌ اَنْ اٰمِنُوْا بِاللّٰهِ وَجَاهِدُوْا مَعَ رَسُوْلِهِ اسْتَاْذَنَكَ اُولُوا الطَّوْلِ مِنْهُمْ وَقَالُوْا ذَرْنَا نَكُنْ مَّعَ الْقٰعِدِيْنَ ﴿٨٦﴾

(८६) तथा जब कुनै सूरत (कुर्आन करीमको अध्याय) अवतरित गरिन्छ कि अल्लाहमाथि ईमान स्थापित गर तथा त्यसको रसूलका साथ मिलेर धर्मयुद्ध गर, त उनीहरूमध्ये धनवानहरुको एक गुट तपाईंको पासमा आएर यो भनेर अनुमति लिन्छ कि हामीलाई त बसिरहनेहरुमा नै छाडिदिनुस्।[2]

गरिदियो। (सहीह बुख़ारी तफ़सीर सूरः बराअत तथा मुस्लिम किताबु सिफ़तिल मुनाफिक़ीन व अहकामिहि)

[1]यो नमाज़ जनाज़ा तथा दोष मुक्तिको प्रार्थना नगर्नुको कारण हो जसको अर्थ यो हो कि जसको मृत्यु अधर्म तथा कुकर्ममा हुन्छ, उनका लागि न नमाज़ पढ्नुपर्छ तथा न उनको लागि दोष मुक्तिको प्रार्थना गर्नु मान्य छ। एउटा हदीसमा वर्णित छ कि जब नबी सल्लल्लाहु अलैहि वसल्लम कब्रस्तान (समाधि स्थल) पुग्नुभयो त थाहा भयो कि अब्दुल्लाह बिन उबैयलाई गाडिसकिएको छ। अतः उहाँ सल्लल्लाहु अलैहि वसल्लमले त्यसलाई कब्रबाट निकाल्न लगाउनुभयो तथा आफ्ना घुँडामा राखेर त्यसमथि आफ्नो र्‍याल (सालिभा) चुहाउनुभयो। आफ्नो कमीज उसलाई पहिराउनु भयो। (सहीह बुख़ारी किताबुल लिबास र सहीह मुस्लिम किताबुल मुनाफ़िक़िन) जसबाट विदित हुन्छ कि जो ईमानबाट बञ्चित हुनेछ, त्यसलाई संसारको महानभन्दा महान व्यक्तिको दोषमुक्तिको प्रार्थना तथा त्यसको सिफारिश पनि कुनै लाभ पुऱ्याउन सक्ने छैन।

[2]यो तिनै नै अवसरवादीहरुको वर्णन हो जसले झूठा बहाना बनाएर पछाडी बसिराख्नु नै राम्रो ठानेका थिए (اولو الطول) सित तात्पर्य हो धनवान अर्थात् यिनीहरूको पछाडी रहनु हुन्नथ्यो।

رَضُوْا بِاَنْ يَّكُوْنُوْا مَعَ الْخَوَالِفِ وَطُبِعَ عَلٰى قُلُوْبِهِمْ فَهُمْ لَا يَفْقَهُوْنَ ﴿٨٧﴾

(८७) उनी यसैमा प्रसन्न भए कि पछाडि पर्ने स्त्रीहरुका साथमा रहून्,र उनका हृदयहरुमा मोहर (छाप) लगाइसकिएको छ । अतः उनी बुभ्दैनन् ।[1]

لٰكِنِ الرَّسُوْلُ وَالَّذِيْنَ اٰمَنُوْا مَعَهٗ جٰهَدُوْا بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ ؕ وَاُولٰٓئِكَ لَهُمُ الْخَيْرٰتُ ؗ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿٨٨﴾

(८८) परन्तु स्वयं रसूल (ईशदूत) सल्लल्लाहु अलैहि वसल्लम तथा त्यसका साथका ईमान भएकाहरु आफ्ना धन एवं प्राणले धर्मयुद्ध (जिहाद) गर्दछन्, उनीहरूकै लागि भलाई छ तथा यिनीहरू सफलता प्राप्त गर्नेहरू हुन् ।

اَعَدَّ اللّٰهُ لَهُمْ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا ؕ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿٨٩﴾

(८९) उनीहरूकै लागि अल्लाह (तआ़ला) ले ती स्वर्ग तयार गरेको छ, जसमा नहरहरु बगिराखेका छन्, जसमा उनी नित्यनिवासी हुनेछन् । यही बहुत ठूलो सफलता हो ।[2]

وَجَآءَ الْمُعَذِّرُوْنَ مِنَ الْاَعْرَابِ لِيُؤْذَنَ لَهُمْ وَقَعَدَ الَّذِيْنَ كَذَبُوا اللّٰهَ وَرَسُوْلَهٗ ؕ

(९०) गँवारहरु (बद्दु) मध्येबाट बहाना बनाउने व्यक्तिहरु उपस्थित भए कि उनीहरूलाई अनुमति दिइयोस् तथा उनी बसिरहून् जसले अल्लाहसित तथा त्यसका

किनभने उनको पासमा अल्लाहबाट प्रदान गरिएका सबै कुरा थिए । (قاعدين) को तात्पर्य केही मजबूरीका कारण घरमा बसिरहनेवाला आदि हुन्, जस्तो कि आउने आयतमा उनलाई (خوالف) सित तुलना गरिएको छ, जुन (خالفة) को बहुवचन हो, अर्थात् "पछि रहने स्त्रीहरु ।"

[1]हृदयहरुमा मोहर (छाप) लाग्नु, यो निरन्तर पाप गर्नाको कारण हुन्छ जसको स्पष्टीकरण अघि गरिसकिएको छ, यसको उपरान्त मनुष्य सोच्ने, बुझ्ने शक्तिबाट बञ्चित हुन्छ ।

[2]ती पाखण्डीहरुका विपरीत ईमान भएकाहरुको व्यवहार यो हो कि उनी आफ्ना तन-मन-धनले अल्लाहको मार्गमा धर्मयुद्ध गर्दछन् । अल्लाहको मार्गमा उनीहरूलाई आफ्ना प्राणको चिन्ता पनि छैन तथा न धनको । उनका निकट अल्लाहको आदेश सर्वोपरि छ । उनैको लागि भलाई छ अर्थात् परलोकको भलाई तथा स्वर्गको सुख । तथा केही ज्ञाताहरूका निकट लोक-परलोक दुबै स्थानहरुको लाभ, तथा यिनै व्यक्तिहरु सफल तथा उच्च पदहरुमा आसीन हुने योग्य हुनेछन् ।

سَيُصِيبُ الَّذِينَ كَفَرُوا مِنْهُمْ عَذَابٌ أَلِيمٌ ﴿٩٠﴾

रसूलसित झूठा कुरा रचेका थिए । अब त उनीहरूमा जति पनि काफिरहरू छन्, उनलाई दुखदायी यातना पुगेर नै छाड्नेछ ।[1]

لَيْسَ عَلَى الضُّعَفَاءِ وَلَا عَلَى الْمَرْضَىٰ وَلَا عَلَى الَّذِينَ لَا يَجِدُونَ مَا يُنفِقُونَ حَرَجٌ إِذَا نَصَحُوا لِلَّهِ وَرَسُولِهِ ۚ مَا عَلَى الْمُحْسِنِينَ مِن سَبِيلٍ ۚ وَاللَّهُ غَفُورٌ رَّحِيمٌ ﴿٩١﴾

(९१) कमजोरहरुका लागि र बिरामीहरुका लागि तथा उनीहरूका लागि जसलाई खर्च गर्नको निम्ति केही प्राप्त छैन, कुनै दोष छैन, जबकि उनीहरू अल्लाह र त्यसको रसूलप्रति निष्ठावान छन् । उत्तमकारहरुलाई कुनै दोषको कुनै मार्ग छैन तथा अल्लाह क्षमावान दयालु छ ।[2]

[1]यी (مُعذِّرِين) को विषयमा व्याख्याकारहरुको बीच मतभेद छ । केही विद्वानहरूका निकट नगरबाट टाढा बस्ने ती ग्रामीण थिए जसले झूठा कारण भनेर आज्ञा प्राप्त गरेका थिए । दोस्रो, उनीहरूमा तिनी पनि थिए जसले आएर कारण भन्नु पनि उचित ठानेनन् तथा बसिरहे । यसप्रकार यस आयतमा पाखण्डीहरुका दुई गुटहरुको वर्णन छ । (مِنْهُم) बाट झूठा कारण प्रस्तुत गर्ने तथा बसिरहने दुबै गुटहरुको वर्णन छ । अन्य व्याख्याकारहरुले (مُعذِّرُون) सित तात्पर्य यस्ता ग्रामीण मुसलमानलाई लिएका छन्, जसले उचित कारण प्रस्तुत गर्नको आज्ञा प्राप्त गरेका थिए । र (مُعذِّرُون) उनका निकट वास्तवमा (مُعذِّرُون) हुन् । अरबीको अक्षर 'त' लाई अक्षर जालमा सन्धि गरिएको छ । तथा (معتذر) को अर्थ हो, वास्तविक कारण राख्नेवाला । यस आधारमा आयतको आउँदो वाक्यमा पाखण्डीहरुको वर्णन छ । तथा आयतमा दुई गुटहरुको वर्णन छ । पहिलो वाक्यमा ती मुसलमानहरुको, जोसित वास्तवमा कारणहरू थिए तथा अर्का पाखण्डी, जो बिना कारण भनी बसिरहे तथा आयतको अन्त्यमा जुन चेतावनी छ, यसै दोस्रो गुटको लागि छ । (والله أعلم)

[2]यस आयतमा ती मानिसहरूको वर्णन छ जो वास्तवमा विवश थिए तथा उनको कारण पनि स्पष्ट थियो । जस्तो कि (१) निर्बल तथा कमजोर अर्थात बूढा तथा अन्धा लँगडा आदि असमर्थ यसै परिधिमा आउँछन् । केही ज्ञाताहरूले उनलाई रोगीहरुमा सम्मिलित गरेका छन् । (२) रोगी (३) जोसित धर्मयुद्धको खर्च उठाउन शक्ति थिएन तथा बैतुल माल (धार्मिक कोष) मा पनि तिनका खर्च उठाउने शक्ति थिएन । अल्लाह तथा त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लमका हितसित तात्पर्य छ, धर्मयुद्धको लागि उनीहरूका हृदयमा तडप, मुजाहिदीन (धर्मयुद्धका सैनिकहरु) सित प्रेम राख्दछन् तथा अल्लाह एवं त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लमका आदेशहरुको पालना गर्दछन् । यस्ता मोहसिनीन (परोपकारी) यदि धर्मयुद्धमा सम्मिलित हुन अयोग्य छन् भने उनलाई कुनै पाप छैन ।

(९२) हो उनीमाथि पनि कुनै दोष छैन जो तपाईंको पासमा आउँछन् ताकि तपाईं उनीहरूका लागि सवारीको प्रबन्ध मिलाउनुस् तब तपाईं उत्तर दिनुहुन्छ कि म तिम्रो वाहनको निम्ति केही नपाएको भए त उनी दुखले अश्रु बगाउँदै फर्कन्छन् कि उनीहरूलाई खर्च गर्नका लागि केही पनि प्राप्त छैन ।[1]

وَلَا عَلَى الَّذِينَ إِذَا مَا أَتَوْكَ لِتَحْمِلَهُمْ قُلْتَ لَا أَجِدُ مَا أَحْمِلُكُمْ عَلَيْهِ تَوَلَّوْا وَّأَعْيُنُهُمْ تَفِيضُ مِنَ الدَّمْعِ حَزَنًا أَلَّا يَجِدُوا مَا يُنْفِقُونَ ﴿٩٢﴾

(९३) निश्चय उनीमाथि मार्ग (आक्षेप) छ, जो धनी भएर पनि तपाईंसित अनुमति माग्दछन् । यिनी नारीहरुसँग रहिरहने कुरोमा प्रसन्न छन् एवं अल्लाहले उनको हृदयमा मोहर (छाप) लगाइदिएको छ, जसको कारण उनी अज्ञान भइसकेका छन् ।[2]

إِنَّمَا السَّبِيلُ عَلَى الَّذِينَ يَسْتَأْذِنُونَكَ وَهُمْ أَغْنِيَاءُ رَضُوا بِأَنْ يَكُونُوا مَعَ الْخَوَالِفِ وَطَبَعَ اللَّهُ عَلَى قُلُوبِهِمْ فَهُمْ لَا يَعْلَمُونَ ﴿٩٣﴾

[1]यी मुसलमानहरुको एउटा गुटको वर्णन हो, जोसित आफ्ना सवारी पनि थिएनन् तथा नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि उनीहरूलाई सवारी उपलब्ध गराउनमा असमर्थता व्यक्त गर्नुभयो जसपश्चात उनलाई यति दुख भयो कि आँखाहरुबाट आँसु बग्नथाले । (رضی الله عنهم) अर्थात् निःस्वार्थी मुसलमान, जो कुनै पनि प्रकारको उचित कारण राख्दथे ।" अल्लाह तआलाले जो प्रत्येक प्रत्यक्ष तथा लुकेका कुराको ज्ञाता छ, उनीहरूलाई धर्मयुद्धमा सम्मिलित हुनबाट अलग्ग गरिदियो । बरु हदीसमा वर्णन छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले ती असमर्थ मानिसहरूका विषयमा धर्मयुद्धमा सम्मिलित हुने व्यक्तिहरुसित भन्नुभयो कि, "तिम्रा पछाडी मदीनामा केही मानिसहरू यस्ता पनि छन् कि तिमी जुन घाटी (बेंसी) लाई पार गर्दछौ, तथा जुन मार्गमा हिंड्दछौ तिम्रो साथमा उनी प्रतिफल पाउनमा समान रूपले सम्मिलित छन् ।" सहाबा करामले सोधे, यो कुन प्रकारले हुनसक्छ, जबकि उनी मदीनामा बसेका छन् ? उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो (حَبَسَهم العُذْرُ) "असमर्थताको कारणले उनीहरूलाई त्यहाँ रोकिदिइएको छ ।" (सहीह बुख़ारी जिहाद तथा सहीह मुस्लिम संख्या-१५१८)

[2]यी पाखण्डी हुन् जसको वर्णन आयत संख्या ८६ तथा ८७ मा भइसकेको छ यहाँ पुनः उनको वर्णन निःस्वार्थ मुसलमानहरूको तुलनामा भएको छ । (خوالف) बहुवचन (خالفة) को हो । (पछि रहेका) तात्पर्य स्त्री, बच्चा, असमर्थ तथा अत्याधिक रोगले पीडित एवं बृद्ध हुन्, जो युद्धमा सम्मिलित हुनबाट असमर्थ छन् । (لا يعلمون) को अर्थ हो, उनीहरू जान्दैनन् कि पछि रहनु कति ठूलो अपराध हो, अन्यथा संभवतः उनी रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमबाट पछि रहँदैनथे ।

يَعْتَذِرُوْنَ اِلَيْكُمْ اِذَا رَجَعْتُمْ اِلَيْهِمْ ؕ قُلْ لَّا تَعْتَذِرُوْا لَنْ نُّؤْمِنَ لَكُمْ قَدْ نَبَّاَنَا اللّٰهُ مِنْ اَخْبَارِكُمْ ؕ وَسَيَرَى اللّٰهُ عَمَلَكُمْ وَرَسُوْلُهٗ ثُمَّ تُرَدُّوْنَ اِلٰى عٰلِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٩٤﴾

(९४) उनीहरू तिमीसित बहाना बनाउने छन् जब तिमी उनका निकट जानेछौ, (हे नबी) भनिदेउ कि बहाना नबनाऊ, हामी तिमीलाई विश्वास गर्ने छैनौं। अल्लाहले हामीलाई तिम्रा (कर्तूतहरु) बाट सूचित गरिदिएको छ, तथा अल्लाह एवं त्यसका रसूल (सन्देशवाहक) तिम्रा कर्म देख्नेछन् अनि तिमी परोक्ष एवं प्रत्यक्षको जानकारका निकट फर्काइनेछौ तथा त्यसले तिमीलाई त्यसबारे सूचित गर्नेछ जे तिमी गरिराखेका थियौ।

سَيَحْلِفُوْنَ بِاللّٰهِ لَكُمْ اِذَا انْقَلَبْتُمْ اِلَيْهِمْ لِتُعْرِضُوْا عَنْهُمْ ؕ فَاَعْرِضُوْا عَنْهُمْ ؕ اِنَّهُمْ رِجْسٌ ؗ وَّمَاْوٰىهُمْ جَهَنَّمُ ۚ جَزَآءًۢ بِمَا كَانُوْا يَكْسِبُوْنَ ﴿٩٥﴾

(९५) जब तिमी उनको पासमा फर्कनेछौ त्यतिखेर तिनीहरू तिम्रो समक्ष अल्लाहको कसम खानेछन् ताकि तिमी उनीहरूलाई उनको दशामा छाडिदेउ, अतः तिमी उनीहरूलाई उनीहरुकै स्थितिमा छाडिदेउ। वस्तुतः उनीहरू अत्यन्त अपवित्र छन् तथा उनको स्थान नरक हो। यो उनीहरूका कर्तुतहरुको प्रतिफल हो जुन उनीहरूले गर्दथ।

يَحْلِفُوْنَ لَكُمْ لِتَرْضَوْا عَنْهُمْ ۚ فَاِنْ تَرْضَوْا عَنْهُمْ فَاِنَّ اللّٰهَ لَا يَرْضٰى عَنِ الْقَوْمِ الْفٰسِقِيْنَ ﴿٩٦﴾

(९६) यिनी तिम्रो अगाडि यसकारण शपथ लिनेछन् कि तिमी उनीहरूसित प्रसन्न होउ किन्तु तिमी उनीहरूसित प्रसन्न भईहाले पनि अल्लाह यस्ता दुराचारीहरूसित प्रसन्न हुँदैन।[1]

[1]यी तीन आयतमा ती द्वयवादीहरु (मुनाफ़िक) को वर्णन हो जो तबूकको युद्धका समय मुसलमानहरुको साथमा गएका थिएनन्। नबी सल्लल्लाहु अलैहि वसल्लम तथा मुसलमानहरु सुरक्षित फर्किआए पश्चात आफ्ना बहाना प्रस्तुत गरी उनका दृष्टिमा वफ़ादार बन्न चाहन्थे। अल्लाह तआ़लाले भन्यो कि जब तिमी उनका छेउ पुग्नेछौ त यिनी बहाना बनाउनेछन्। उनीहरूसित भनिदेउ कि मेरो समक्ष कारण बनाउनुको आवश्यकता छैन, यसकारण कि अल्लाह तआ़लाले तिम्रो वास्तविक स्थितिसित हामीलाई सूचित गरिदिएको छ। अब तिम्रा झूठा बहानाहरुमा हामी विश्वास कसरी गर्न सक्दछौं? तर ती बहानाहरुको वास्तविकता निकट भविष्यमा स्पष्ट भएर आउनेछ, तिम्रा कर्महरुसित जसलाई अल्लाह तआ़ला देखिराखेको छ तथा रसूल सल्लल्लाहु अलैहि वसल्लमको पनि दृष्टि त्यसमा छ र तिम्रा कारणहरु स्वयं स्पष्ट

(९७) असभ्य ग्रामीण व्यक्तिहरु कुफ्र तथा उन्मादमा बहुतै कठोर छन्,[1] तथा उनीहरू यसैका योग्य छन् कि त्यसका सीमाहरूबाट अनभिज्ञ रहून् जसलाई अल्लाहले आफ्नो रसूलमाथि अवतरित गरेको छ । अल्लाह सर्वज्ञ तत्वदर्शी छ ।

ٱلۡأَعۡرَابُ أَشَدُّ كُفۡرٗا وَنِفَاقٗا وَأَجۡدَرُ أَلَّا يَعۡلَمُواْ حُدُودَ مَآ أَنزَلَ ٱللَّهُ عَلَىٰ رَسُولِهِۦۗ وَٱللَّهُ عَلِيمٌ حَكِيمٞ ۝٩٧

भएर आउनेछन् । तथा यदि तिमी रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम तथा मुसलमानहरुलाई तैपनि धोका तथा छल गर्नमा सफल भयौ भने अन्त्यमा त्यो एउटा समय आउने नै छ, जब तिमी यस्तो शक्तिको दरबारमा उपस्थित गरिनेछौ जुन लुकेको र स्पष्ट भएका सबै कुराहरुलाई जान्दछ। त्यसलाई तिमी कदापि धोका दिन सक्दैनौ। त्यो अल्लाह तआला तिम्रा सबै कुरालाई तिम्रो साम् प्रस्टरूपले राखिदिनेछ। दोस्रो आयतमा भन्यो कि तिमी फर्किआए पश्चात कसम खानेछन् ताकि तिमी उनलाई क्षमा गरिदेउ । तर तिमी उनीहरूलाई उनको अवस्थामा छोडिदेउ । यी व्यक्तिहरु आफ्ना विश्वास तथा कर्मका अनुसार अशुद्ध छन्, उनीहरूले जे-जति गरेका छन्, त्यसको फल नरक नै हो। तेस्रो आयतमा भन्यो कि यिनीहरू तिमीलाई प्रसन्न गर्नको लागि कसम खानेछन्। तर यी मुर्खहरुलाई यो ज्ञान छैन कि यदि तिमी यिनीहरूसित प्रसन्न पनि हुन्छौ भने यिनीहरूले जुन फिस्क अर्थात अल्लाहको आज्ञा पालनाबाट मुख फर्काइ भाग्नेमार्ग अपनाएका छन्, त्यसका कारण अल्लाह तआला उनीसित कसरी प्रसन्न हुनसक्छ ?

[1]उपरोक्त आयतहरुमा ती द्वयवादीहरुको वर्णन थियो जो मदीना नगरका निवासी थिए तथा केही ती पाखण्डी पनि थिए, जो मदीना नगरका निकटवर्ती गाउँहरुमा निवास गर्दथे । त्यसलाई अरबी भाषामा (أعراب) भनिन्छ, जुन (أعرابى) को बहुवचन हो । नगरवासीहरुको व्यवहार एवं चरित्रको अपेक्षा जुनप्रकार उनीहरूमा अभद्रता तथा कठोरता पाइन्थ्यो त्यसैप्रकार उनमा जो काफ़िर तथा पाखण्डी थिए तिनी कुफ्र तथा पाखण्डमा नगरवासीहरुभन्दा अधिक कठोर तथा धार्मिक आदेशहरुबाट अधिक अनभिज्ञ थिए। यस आयतमा उनीहरुकै वर्णन तथा उनका यसै व्यवहारको स्पष्टीकरण छ। केही हदीसहरुबाट पनि उनको व्यवहारमथि प्रकाश पर्दछ । जस्तै एक समय केही अरब ग्रामीण मानिसहरू रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भए तथा उनीहरूले सोधे (أتقبلون صبيانكم) 'के तिमी आफ्ना बच्चाहरुलाई चुम्बन गर्दछौ ?' सहाबाले भने "हो" उनीहरूले भने, "अल्लाहको सौगन्ध हामी त चुम्बन गर्दैनौं ।" रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले यो सुनेर भन्नुभयो "यदि अल्लाहले तिम्रा हृदयबाट प्रेम तथा दयाको भावना निकालिदिएको छ भने त्यसमा मेरो के अधिकार ?" (सहीह बुख़ारी किताबुल अदब बाब रहमतुल वलदे व तकबीलुहु व मुआनकतहू र सहीह मुस्लिम किताबुल फज़ायल बाब रहमतुहु सल्लल्लाहु अलैहि वसल्लम अस्सिबयान वल अयाल) ।

وَمِنَ الْأَعْرَابِ مَنْ يَتَّخِذُ مَا يُنْفِقُ مَغْرَمًا وَيَتَرَبَّصُ بِكُمُ الدَّوَائِرَ ۚ عَلَيْهِمْ دَائِرَةُ السَّوْءِ ۗ وَاللَّهُ سَمِيعٌ عَلِيمٌ ﴿٩٨﴾

(९८) तथा ती ग्रामीणहरुमध्ये केही यस्ता छन्[२] जो-जे खर्च गर्दछन् त्यसलाई दण्ड ठान्दछन् ।[३] तथा तिमी (मुसलमानहरू) का लागि नराम्रा दिनका प्रतीक्षामा रहन्छन् ।[४] नराम्रो समय उनीमाथि नै आइपर्नेछ,[५] तथा अल्लाह सर्वश्रोता तथा सर्वज्ञ छ ।

وَمِنَ الْأَعْرَابِ مَنْ يُؤْمِنُ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَيَتَّخِذُ مَا يُنْفِقُ قُرُبَاتٍ عِنْدَ اللَّهِ وَصَلَوَاتِ الرَّسُولِ ۚ أَلَا إِنَّهَا قُرْبَةٌ لَهُمْ ۚ سَيُدْخِلُهُمُ

(९९) तथा केही ग्रामीणहरुमा यस्ता पनि छन् जो अल्लाहमा तथा केयामतको दिनमा ईमान राख्दछन् तथा जे-जति खर्च गर्दछन्, त्यसलाई अल्लाहको निकटता तथा रसूलको आशिर्वाद प्राप्त गर्ने साधन बनाउँछन् ।[६] याद राख

---

[१]यसको कारण यो हो कि उनीहरू नगरबाट टाढा रहन्छन् तथा अल्लाह तथा रसूलका कुरा सुन्ने अवसर उनलाई प्राप्त हुँदैन ।

[२]अब यी ग्रामीणहरुको दुईप्रकार भनिंदैछ । यो प्रथम प्रकार हो ।

[३](غُرْم) आर्थिक दण्डलाई भन्दछन् अर्थात् यस्ता व्यय जुन अप्रसन्नताका साथ बाध्य भई गरिन्छ ।

[४](دائرٌ) को बहुवचन (دَوائرٌ) हो । सांसारिक घटनाचक्र अर्थात् कठिनाई तथा कष्टहरु । अर्थात् उनीहरू प्रतीक्षामा रहन्छन् कि मुसलमान सांसारिक घटनाचक्रका कठिनाई तथा दुखहरुका शिकार रहुन् ।

[५]यो श्राप अर्थात् विधेय हो कि सांसारिक घटनाचक्र तथा दुख उनैमाथि परोस् किनभने उनी नै त्यसका योग्य छन् ।

[६]यो अरब ग्रामीणहरुको दोस्रो प्रकार हो जसलाई अल्लाहले शहरी क्षेत्रबाट टाढा रहनुका उपरान्त, अल्लाह तथा आख़िरतको दिनमा ईमान कायम गर्ने कुराको सौभाग्य प्रदान गरेको छ । तथा यस ईमानका कारण उनीबाट त्यो गवाँरपनलाई पनि हटाइदियो जुन ग्रामीण जीवनका कारण ग्रामीणहरुमा सामान्यरूपले पाईन्छ । अत: उनी अल्लाहको मार्गमा ख़र्च भएको माललाई दण्ड ठान्नुको सट्टा अल्लाहको निकटता तथा रसूल सल्लल्लाहु अलैहि वसल्लमको आशिर्वाद

اللهُ فِي رَحْمَتِهِ ۗ إِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ۝

कि उनीहरूको यो खर्च गर्ने कार्य निःसन्देह उनको लागि निकटताको साधन हो, उनलाई अल्लाह अवश्य आफ्नो कृपामा प्रवेश दिनेछ ।[1] अल्लाह तआला अति क्षमाशील कृपानिधि छ ।

وَالسَّٰبِقُونَ الْأَوَّلُونَ مِنَ الْمُهَٰجِرِينَ وَالْأَنصَارِ وَالَّذِينَ اتَّبَعُوهُم بِإِحْسَٰنٍ رَّضِيَ اللَّهُ

(१००) तथा जुन मोहाजिर (मक्काबाट मदीना आएका मानिसहरू) तथा अन्सार (मदीनाका मूल निवासी) आदिम तथा प्रथम छन् तथा जति मानिसहरू निःस्वार्थरूपले उनका अनुयायी छन्,[2]

लिनलाई साधन ठान्दछन् । यो संकेत हो रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको त्यस व्यवहारतिर जुन दान दिनेहरुका लागि वहाँ सल्लल्लाहु अलैहि वसल्लमको थियो । अर्थात् उहाँ सल्लल्लाहु अलैहि वसल्लम उनका पक्षमा पुण्य प्रदानका लागि अल्लाहसित प्रार्थना गर्दथे । जुनप्रकार हदीसमा वर्णन आउँछ कि एक दान ल्याउने मानिसको लागि उहाँले प्रार्थना गर्नुभयो । ( «اللَّهُمَّ صَلِّ عَلَىٰ آلِ أَبِي أَوْفَىٰ» ) (सहीह बुख़ारी संख्या ४१६६ र सहीह मुस्लिम संख्या ७५६) "हे अल्लाह ! अबी औफाका सन्तानमाथि दया गर ।"

[1]यो शुभ-सूचना हो कि अल्लाहको निकटता उनीहरूलाई प्राप्त छ तथा अल्लाहको कृपाका उनीहरू पात्र हुन् ।

[2]यसमा तीनवटा गुटहरुको वर्णन छ । एउटा मोहाजिरहरुको, जसले धर्मका लागि अल्लाह तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको आदेशमा मक्का तथा अन्य क्षेत्रहरुवाट स्थानान्तरण गरे तथा सबै कुरा छाडि मदीना आए । दोस्रो, अन्सार जो मदीनाका निवासी थिए । उनीहरूले प्रत्येक अवसरमा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको सहायता तथा सुरक्षा गरे तथा मदीना आउने मोहाजिरहरुको पनि अत्याधिक सहायता तथा सम्मान गरे । तथा आफ्नो सबैकुरा उनको सेवामा प्रस्तुत गरे । यहाँ दुबै गुटहरुका पहल गर्नेहरुको वर्णन छ, अर्थात दुबै गुटहरुमा जो इस्लाम स्वीकार गर्नमा सबभन्दा प्रथम रहे । यसको परिभाषामा मतभेद छ । केही ज्ञाताका निकट प्रथम पहल गर्ने ती हुन् जसले दुवै क़िब्लातिर मुख फर्काइ नमाज़ पढे अर्थात् क़िब्ला परिवर्तन पूर्व मुसलमान हुने मोहाज़िर तथा अन्सार । केहीका निकट उनी सहाबी हुन् जो हुदैबियामा बैअते रिज़वानमा उपस्थित थिए । केहीका निकट बद्रका योद्धाहरू हुन् । इमाम शौकानी भन्नुहुन्छ यी सबै हुनसक्छन् । तेस्रो गुट त्यो हो जो यी मोहाजिर तथा अन्सारहरुका सद्व्यवहार तथा उपकारका साथ अनुयायी हुन् । यस गुटबाट तात्पर्य केहीका निकट परिभाषित ताबईन हुन् जसले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई देखेनन्

عَنْهُمْ وَرَضُوا عَنْهُ وَأَعَدَّ لَهُمْ جَنّٰتٍ تَجْرِيْ تَحْتَهَا الْأَنْهٰرُ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۚ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿١٠٠﴾

अल्लाह उनी सबैसँग प्रसन्न भयो तथा उनी सबै अल्लाहसित प्रसन्न भए तथा अल्लाहले उनका लागि यस्ता बाग़को प्रबन्ध गरेको छ जसमा नहरहरु बगिराखेका छन्, जहाँ उनी सधैं रहनेछन्,[1] यो ठूलो सफलता हो ।

وَمِمَّنْ حَوْلَكُمْ مِّنَ الْاَعْرَابِ مُنٰفِقُوْنَ ۛ وَمِنْ اَهْلِ الْمَدِيْنَةِ ۛ مَرَدُوْا عَلَى النِّفَاقِ ۫ لَا تَعْلَمُهُمْ ۭ

(१०१) तथा तिम्रा आसपासका केही ग्रामीणहरु मध्ये एवं मदीनाका निवासीहरुमा यस्ता अवसरवादी छन् जो द्वयवादमा अडिग भएका छन्,[2]

परन्तु उनीहरूलाई सहाबाको निकटता एवं संगतको सौभाग्य प्राप्त भयो तथा केहीका निकट यसबाट तात्पर्य सामान्य मुसलमान हुन् अर्थात् क़ेयामतसम्म जति पनि अन्सार तथा मोहाजिरसित प्रेम राख्ने तथा उनका पदचिन्हहरुमा हिंड्ने मुसलमान छन्, उनीहरू त्यसमा सम्मिलित छन् । यसमा परिभाषित ताबईन पनि सम्मिलित हुन्छन् ।

[1]अल्लाह तआला उनीसित प्रसन्न भएको अर्थ हो । अल्लाह तआलाले उनका पुण्य स्वीकार गऱ्यो, उनीहरू मनुष्य भएको कारण जुन त्रुटिहरु भए तिनलाई क्षमा गरिदियो तथा त्यो उनीमाथि क्रोधित छैन किनभने यदि यस्तो नभएको भए उनका लागि स्वर्गका सुखहरुको शुभ-सूचना किन दिइन्थ्यो ? जुन यसै आयतमा दिएको छ । यसबाट यो पनि ज्ञात भयो कि अल्लाहको प्रसन्नता सामयिक अथवा अस्थाई होइन, बरु स्थाई हो । यदि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम पश्चात सहाबा किराम पथभ्रष्ट हुने कुरा भएको भए (जस्तो कि एउटा झूठो गुटको विश्वास छ) त अल्लाह तआलाले उनीहरूलाई स्वर्गका सुखको शुभ-सूचनाबाट सम्मानित गर्दैनथ्यो । यसबाट यो पनि ज्ञात भयो कि जब अल्लाहले उनका सारा त्रुटिहरुलाई क्षमा गरिदियो त अब आलोचना तथा टिप्पणीका रूपमा उनका कमीको वर्णन गर्नु कुनै मुसलमानलाई शोभा दिंदैन । यसका अतिरिक्त यो पनि ज्ञात भयो कि उनका प्रेम तथा अनुकरण अल्लाहको प्रसन्नताको साधन हो तथा उनीसित द्वेष तथा वैरभाव एवं ईर्ष्या गर्नु अल्लाहको प्रसन्नताबाट बञ्चित हुनुको कारण हो ।

[2](مرَدَ) तथा (تَمرَّدَ) को अर्थ हो कोमलता, चिप्लोपना तथा नाङ्गा । अत: त्यस शाखाको जसमा पत्ता नहोस् । जुन घोडाका रौं हुँदैन, जुन केटाका मुखमा रौं हुँदैन, यी सबैलाई (أمرد) भनिन्छ तथा शीशालाई (صَرْحٌ ممرّدٌ أي مجردٌ) भनिन्छ । (مردوا على النفاق) को अर्थ हुनेछ (تجردوا على النفاق) जस्तो कि उनीहरूले द्वयवादको लागि आफूलाई शुद्ध रूपमा अर्पित गरिदिएका छन् अर्थात् यसमा उनको प्रवल तथा निरन्तर कार्य गर्नु हो ।

نَحْنُ نَعْلَمُهُمْ سَنُعَذِّبُهُمْ مَّرَّتَيْنِ ثُمَّ يُرَدُّونَ إِلَىٰ عَذَابٍ عَظِيمٍ ﴿١٠١﴾

तपाईं उनीहरूलाई जान्नुहुन्न ।[1] उनलाई हामी जान्दछौं । हामी उनलाई दुई पटक दण्ड दिनेछौं ।[2] अनि उनीहरू निकै ठूलो यातनातिर पठाइनेछन् ।

وَآخَرُونَ اعْتَرَفُوا بِذُنُوبِهِمْ خَلَطُوا عَمَلًا صَالِحًا وَآخَرَ سَيِّئًا عَسَى اللَّهُ أَن يَتُوبَ عَلَيْهِمْ ۚ إِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿١٠٢﴾

(१०२) तथा अन्य केही व्यक्तिहरु छन् जो आफ्ना त्रुटिहरुलाई स्वीकार गर्दछन्,[3] जसले मिश्रित कर्म गरेका थिए, केही राम्रा तथा केही नराम्रा ।[4] आशा छ कि अल्लाहले उनीहरूको क्षमा स्वीकार गरोस् ।[5] निःसन्देह अल्लाह क्षमाशील एवं अत्याधिक कृपालु छ ।

خُذْ مِنْ أَمْوَالِهِمْ صَدَقَةً تُطَهِّرُهُمْ وَتُزَكِّيهِم بِهَا وَصَلِّ عَلَيْهِمْ ۖ

(१०३) तपाईं उनीहरूका मालबाट दान लिनुहोस्, जसबाट तपाईं उनीहरूलाई शुद्ध एवं पवित्र गर्नुहुन्छ तथा उनको लागि प्रार्थना गर्नुहोस् ।[6] निःसन्देह

[1] कति प्रष्ट शब्दहरुमा नबी सल्लल्लाहु अलैहि वसल्लम परोक्षज्ञ हुने कुरोको खण्डन छ । काश, अहले बिदअत् (धर्ममा आधुनीकिकरण गर्नेहरु) लाई कुर्आन राम्ररी बुझ्ने सौभाग्य प्राप्त होस् ।

[2] यसबाट तात्पर्य केही ज्ञाताहरूका निकट संसारको अपमान तथा निरादर तथा पछि आखिरतको यातना हो तथा केहीका निकट संसारमा नै दोहोरो दण्ड छ ।

[3] यिनीहरू ती निःस्वार्थी मुसलमान हुन् जो बिनाकारण मात्र आलस्यले गर्दा तबूकमा नबी सल्लल्लाहु अलैहि वसल्लमका साथ गएनन् तथा पछि उनीहरूलाई आफ्नो त्रुटिको आभास भयो तथा पापलाई स्वीकार गरे ।

[4] भलोसित तात्पर्य त्यो पुण्य कार्य हो, जुन धर्मयुद्धमा पछि रहनुका पूर्व उनीहरू गर्दैआइरहेका छन्, जसमा विभिन्न धर्मयुद्धमा सम्मिलित हुनु पनि हो तथा केही "नराम्रा" बाट तात्पर्य यही तबूकको अवसरमा उनीहरूको पछि रहने कुरा हो ।

[5] अल्लाह तआलाको तर्फबाट आशा विश्वासको लाभ प्रदान गर्दछ अर्थात अल्लाह तआलाले उनीहरूतिर आकर्षित भई उनीहरूका पाप स्वीकार गरेको तौबाको समतुल्य मानेर उनीहरूलाई क्षमा गरिदियो ।

[6] यो सामान्य आदेश हो । दानसित तात्पर्य अनिवार्य दान अर्थात ज़कात पनि हुनसक्छ तथा ऐच्छिक दान पनि । नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सम्बोधित गरिदैछ

إِنَّ صَلَوٰتَكَ سَكَنٌ لَّهُمْ وَٱللَّهُ سَمِيعٌ عَلِيمٌ ﴿١٠٣﴾

तपाईंको प्रार्थना उनीहरूका लागि शान्ति सन्तोषको साधन हो तथा अल्लाह (तआ़ला) राम्ररी सुन्दछ, राम्ररी जान्दछ ।

أَلَمْ يَعْلَمُوٓا۟ أَنَّ ٱللَّهَ هُوَ يَقْبَلُ ٱلتَّوْبَةَ عَنْ عِبَادِهِۦ وَيَأْخُذُ ٱلصَّدَقَٰتِ وَأَنَّ ٱللَّهَ هُوَ ٱلتَّوَّابُ ٱلرَّحِيمُ ﴿١٠٤﴾

(१०४) के उनीहरूलाई यो ज्ञान छैन कि अल्लाह नै आफ्ना भक्तहरुको क्षमा (तौबा) स्वीकार गर्दछ तथा त्यही नै दानलाई अंगीकार गर्दछ ।[1] तथा यो कि अल्लाह नै तौबा स्वीकार गर्नमा तथा कृपा गर्नमा परिपूर्ण छ ।

وَقُلِ ٱعْمَلُوا۟ فَسَيَرَى ٱللَّهُ عَمَلَكُمْ وَرَسُولُهُۥ وَٱلْمُؤْمِنُونَ ۖ وَسَتُرَدُّونَ إِلَىٰ عَٰلِمِ ٱلْغَيْبِ وَٱلشَّهَٰدَةِ

(१०५) तथा भनिदिनुस् कि तिमी कर्म गर्दै जाऊ तिम्रा कर्म अल्लाह स्वयं देख्नेछ तथा त्यसका रसूल तथा ईमान भएकाहरु (पनि देख्नेछन्) तथा अवश्य तिमीलाई यस्ताको पासमा जानुछ

कि त्यसद्वारा तपाईं मुसलमानहरूको शुद्धि तथा उनका मनहरुलाई पवित्र गर्नुस् । यसबाट यो कुरा स्पष्ट हुनजान्छ कि ज़कात तथा सामान्य दान मनुष्यको मन तथा धनको स्वच्छता तथा पवित्रताको साधन हो । यसका अतिरिक्त अरबी भाषामा दानलाई 'सदक़ा' यसकारण भनिन्छ कि यो दिने मानिसको ईमानको सदाकत (सत्यता) अर्थात् सादिक़ (सच्चा) हुने कुरोको प्रमाण हो । दोस्रो कुरो यो ज्ञात भयो कि सदक़ा लिनेले दान दिनेहरूको पक्षमा शुभको प्रार्थना गर्नुपर्दछ । जुनप्रकार यहाँ अल्लाह तआ़लाले आफ्नो पैग़म्बर सल्लल्लाहु अलैहि वसल्लमलाई प्रार्थना गर्न आदेश दिएको छ । तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लम त्यस अनुसार प्रार्थना गर्नुहुन्थ्यो । यस आदेश अनुसार सामान्य रूपले यो निष्कर्ष पनि निकालिएको छ कि ज़कात वसूल गर्ने अधिकार त्यस समयको इमामलाई छ । यदि कोही यसबाट इन्कार गर्दछ भने आदरणीय अबू बक्र सिद्दीक़ तथा सहाबा करामका कर्महरूका अनुसार एवं प्रकाशमा त्यसको विरुद्ध धर्मयुद्ध आवश्यक छ । (इब्ने क़सीर)

[1]दान स्वीकार गर्दछ को अर्थ (यदि त्यो उचित कमाईबाट छ) यो हो कि त्यसलाई वृद्धि गर्दछ । जुनप्रकार हदीसमा वर्णित छ, नबी सल्लल्लाहु अलैहि वसल्मले भन्नुभयो "अल्लाह तआ़ला तिम्रो दानको यसप्रकार पालन-पोषण गर्दछ जुनप्रकारले तिमीहरुमध्ये कोही आफ्नो घोडाको बच्चाहरुको पालन-पोषण गर्दछ, यहाँसम्मकि एउटा खजूरको समान दान (वृद्धि भएर) उहुद पर्वतको समान हुनपुग्दछ ।" (सहीह बुख़ारी किताबुज़ ज़कात, तथा मुस्लिम किताबुज़ ज़कात)

فَيُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ۝

जो सबै लुकेका तथा खुला कुराहरुलाई जान्दछ । अत: त्यसले तिमीलाई तिम्रा सबै गरिएका कुरालाई भनिदिनेछ (प्रतिफल दिनेछ) ।[1]

وَآخَرُونَ مُرْجَوْنَ لِأَمْرِ اللَّهِ إِمَّا يُعَذِّبُهُمْ وَإِمَّا يَتُوبُ عَلَيْهِمْ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ۝

(१०६) तथा केही अन्य व्यक्तिहरु छन् जसका कुरा अल्लाहको आदेश आउन्जेलसम्म स्थगित छ ।[2] या त उनीहरूलाई दण्ड दिनेछ[3] अथवा उनको तौबा (पश्चाताप) स्वीकार गर्नेछ ।[4] तथा अल्लाह सर्वज्ञ छ, अत्याधिक विवेकी छ ।

وَالَّذِينَ اتَّخَذُوا مَسْجِدًا ضِرَارًا وَكُفْرًا وَتَفْرِيقًا بَيْنَ الْمُؤْمِنِينَ وَإِرْصَادًا لِّمَنْ حَارَبَ اللَّهَ وَرَسُولَهُ مِن قَبْلُ ۚ وَلَيَحْلِفُنَّ

(१०७) तथा केही यस्ता छन् जसले यी उद्देश्यहरुबाट मस्जिद निर्माण गरेका छन् कि हानि पुऱ्याऊन तथा कुफ्र अधर्मका कुरा गरून् तथा ईमान भएकाहरुमा मतभेद पारुन् तथा त्यस व्यक्तिको बस्ने प्रबन्ध गरुन् जो यसभन्दा पूर्वबाट अल्लाह तथा

[1]देख्नुबाट तात्पर्य हेर्नु एवं ज्ञान हो । अर्थात तिम्रा करतूतहरुलाई अल्लाह तआला मात्र देख्दैन, वरु तिनको ज्ञान अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लम तथा मुसलमानहरुलाई पनि (वह्यीद्वारा) हुन्छ । (यो पाखण्डीहरुकै विषयमा भनिदैछ) यस विषयमा आयत पूर्वमा पनि चर्चा भइसकेछ । यहाँ ईमान भएकाहरूलाई पनि सम्मिलित गरिएको छ, जसलाई अल्लाहको रसूल सल्लल्लाहु अलैहि वसल्लमबाट भनिएपछि ज्ञान हुन्छ ।

[2]तवूकका युद्धमा पछि पर्नेहरुमा एक त पाखण्डीहरु थिए, अर्को ती जो अकारण नै पछाडी रहेका थिए । तथा उनीहरूले आफ्ना त्रुटिलाई स्वीकार गरिसकेका थिए, परन्तु उनीहरूलाई क्षमा गरिएको थिएन । यस आयतमा उनीहरूकै वर्णन छ जसको मामिला (कुरा) स्थगित गरिएको थियो । यी तीन व्यक्ति थिए जसको चर्चा अगाडी आउने छ ।

[3]यदि उनी आफ्ना त्रुटिमा अडिग रहन्छन् ।

[4]यदि उनी शुद्ध तौबा गर्नेछन् ।

إِنْ أَرَدْنَا إِلَّا الْحُسْنَىٰ ۖ وَاللَّهُ يَشْهَدُ إِنَّهُمْ لَكَاذِبُونَ ⑩⑦

त्यसका रसुलको विरोधी छ[1] तथा कसम खानेछन् कि भलाईका अतिरिक्त हाम्रो अरु कुनै नीयत छैन, अल्लाह साक्षी छ कि उनी पूर्णरुपमा झूठा हुन् ।[2]

لَا تَقُمْ فِيهِ أَبَدًا ۚ لَمَسْجِدٌ أُسِّسَ عَلَى التَّقْوَىٰ مِنْ أَوَّلِ يَوْمٍ أَحَقُّ أَن

(१०८) तपाईं त्यसमा कहिल्यै नउभिनुहोस्,[3] तर जुन मस्जिदको आधारशिला प्रथम दिनदेखि नै ईश्वर परायणतामा राखिएको छ, त्यो यस योग्य छ

[1]यसमा पाखण्डीहरुको अत्यन्त कुरुप व्यवहारको वर्णन छ कि उनीहरूले एउटा मस्जिद निर्माण गराए तथा नवी सल्लल्लाहु अलैहि वसल्लमलाई यो भने कि वर्षा, शीत तथा यसप्रकारका अवसरहरुमा रोगी तथा कमजोरहरुलाई टाढा जान कष्ट हुन्छ । उनीहरूको सुविधाका लागि हामीले मस्जिद बनाएका छौं । तपाईं सल्लल्लाहु अलैहि वसल्लम त्यहाँसम्म हिंडी नमाज़ पढ्नुस् ताकि शुभ प्राप्त होस् । उहाँ सल्लल्लाहु अलैहि वसल्लम त्यसबेला तबूकका लागि पूर्णरूपले तयार हुनुहुन्थ्यो । उहाँले वापसीमा नमाज़ पढ्ने वचन दिनुभयो । परन्तु वापसीमा वह्य (प्रकाशना) द्वारा अल्लाह तआ़लाले पाखण्डीहरुको वास्तविक उद्देश्यबारे प्रष्ट पार्नुभयो कि यसवाट उनी मुसलमानहरूलाई हानि पुऱ्याएर कुफ्रको प्रचार-प्रसार गर्न, मुसलमानहरुका बीचमा मतभेद उत्पन्न गर्न तथा अल्लाह एवं रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका शत्रुहरुका निम्ति निवास स्थान उपलब्ध गराउन चाहन्छन् ।

[2]अर्थात् झूठा कसम खाएर उनीहरू नबी सल्लल्लाहु अलैहि वसल्लमलाई धोका दिन चाहन्थे तर अल्लाह तआ़लाले उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई उनीहरूका छल-कपटवाट बचायो तथा भन्यो कि उनका विचार शुद्ध छैनन् तथा जे-जति प्रकट गरिराखेका छन् त्यसमा झूठा छन् ।

[3]अर्थात् तपाईं सल्लल्लाहु अलैहि वसल्लमले त्यहाँ गई जुन नमाज़ पढ्ने वाचा गर्नुभएको छ त्यसका अनुसार त्यहाँ गई नमाज़ नपढ्नुस् । अत: उहाँ सल्लल्लाहु अलैहि वसल्लमले न केवल यो कि त्यहाँ नमाज़ पढ्नु भएन, बरु आफ्ना केही साथीहरुलाई पठाएर मस्जिद भत्काउन लगाउनु भयो तथा त्यसलाई नष्ट गराइदिनु भयो । यसबाट धर्मगुरुहरूले निष्कर्ष निकालेका छन् कि जुन मस्जिद अल्लाहको पूजाको सट्टा मुसलमानहरु बीच मतभेद उत्पन्न गर्नको लागि बनाईन्छ त्यो मस्जिद जरार हो, त्यसलाई भत्काइयोस् ताकि मुसलमानहरुमा मतभेद उत्पन्न नहोस् ।

تَقُوْمَ فِيْهِ ۭ فِيْهِ رِجَالٌ يُّحِبُّوْنَ اَنْ يَّتَطَهَّرُوْا ۭ وَاللّٰهُ يُحِبُّ الْمُطَّهِّرِيْنَ ۝

कि तपाईं त्यसमा उभिनुहोस् ।[1] यसमा यस्ता मनुष्य छन् जो कि अत्याधिक पवित्र हुन प्रिय ठान्दछन् ।[2] तथा अल्लाह तआला अत्याधिक पवित्र रहनेहरुलाई प्रेम गर्दछ ।

اَفَمَنْ اَسَّسَ بُنْيَانَهٗ عَلٰي تَقْوٰى مِنَ اللّٰهِ وَرِضْوَانٍ خَيْرٌ اَمْ مَّنْ اَسَّسَ بُنْيَانَهٗ عَلٰي شَفَا جُرُفٍ هَارٍ فَانْهَارَ بِهٖ فِيْ نَارِ جَهَنَّمَ ۭ وَاللّٰهُ لَا يَهْدِي الْقَوْمَ الظّٰلِمِيْنَ ۝

(१०९) अनि के यस्तो व्यक्ति श्रेष्ठ छ जसले आफ्नो भवनको आधारशिला अल्लाहसित तर्सन तथा अल्लाहको प्रसन्नतामा राखेको छ अथवा त्यो व्यक्ति कि जसले आफ्नो भवनको आधारशिला घाटीको किनारमा जुनकि खस्न लागेको छ, राखेको छ, अनि त्यसले त्यसलाई लिएर नरकको आगोमा खसोस् ?[3] तथा अल्लाह तआलाले यस्ता अत्याचारीहरुलाई बुझ्ने शक्ति नै दिंदैन ।

[1]यसबाट तात्पर्य कुनचाहिं मस्जिद हो ? यसमा मतभेद छ । केहीले मस्जिदे "कुबा" तथा केहीले मस्जिदे नबवी सल्लल्लाहु अलैहि वसल्लमलाई भनेका छन् । सलफ़को एक समूह दुवैको पक्षमा रहेको छ । इमाम इब्ने कसीर भन्नुहुन्छ कि आयतबाट यदि मस्जिदे कुबा तात्पर्य छ भने केही हदीसहरुमा मस्जिदे नबवी सल्लल्लाहु अलैहि वसल्लमलाई ﴿أُسِّسَ عَلَى التَّقْوَىٰ﴾ को कृतार्थ सिद्ध गरिएको छ । तथा यी दुवैमा कुनै मतभेद छैन । यसकारण कि यदि मस्जिदे कुबामा यो गुण छ कि प्रथम दिनदेखि नै यसको आधारशिला तक्वा राखिएको छ, त मस्जिदे नबवी सल्लल्लाहु अलैहि वसल्लम प्रथम प्रकरणबाट नै यस गुणबाट विभूषित छ तथा त्यसको अनुरूप छ ।

[2]हदीसमा वर्णित छ कि यसबाट तात्पर्य कुबाका निवासी हुन् । नबी सल्लल्लाहु अलैहि वसल्लमले उनीसित सोध्नुभयो कि अल्लाह तआलाले तिम्रो पवित्रताको प्रशंसा गरेको छ, तिमी के गर्दछौ ? उनीहरूले भने कि हामीले माटोका डल्ला प्रयोग गर्नाका साथ-साथ पानी पनि प्रयोग गर्दछौं । (इब्ने कसीर) इमाम इब्ने कसीर भन्नुहुन्छ कि यो आयत यस कुराको प्रमाण हो कि यस्तो प्राचीन मस्जिदमा नमाज़ पढ्नु उत्तम छ, जुन अल्लाह मात्रको पूजा (इबादत) को उद्देश्यले निर्मित गरिएको छ । यसका अतिरिक्त महापुरुषहरुको यस्तो समूहका साथ पढ्नु उत्तम छ जो पूर्ण वज् गर्ने तथा पवित्रता तथा शुद्धतालाई ठिक प्रकारले प्रयोजन गर्नेहरू हुन्छन् ।

[3]यसमा ईमान भएका तथा पाखण्डीहरुका कर्मका उदाहरण दिइएका छन् । निष्ठावानहरुको कर्म अल्लाहको भयमा तथा उसको प्रसन्नताको लागि हुन्छ, जबकि पाखण्डीहरुको

(११०) उनीहरूको यो भवन जसलाई उनीहरूले बनाएका छन् सधैं उनका हृदयमा दुविधाका आधारमा (काँडा बनेर) घोचिरहने छ, यहाँसम्म कि उनका हृदय नै टुक्रा-टुक्रा हुन्छन्[1] अल्लाह सर्वज्ञ तथा तत्वज्ञानी छ ।

لَا يَزَالُ بُنْيَانُهُمُ الَّذِي بَنَوْا رِيبَةً فِي قُلُوبِهِمْ إِلَّا أَن تَقَطَّعَ قُلُوبُهُمْ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿١١٠﴾

(१११) निःसन्देह अल्लाहले मुसलमानहरुबाट तिनीहरूका प्राण तथा धनलाई स्वर्गको साटो[2] किनिसकेको छ, उनी अल्लाहका मार्गमा युद्ध गर्छन् जसमा मार्दछन् एवं मर्दछन्, त्यसको जिम्मामा सत्य वचन छ तौरात तथा इंजील एवं कुर्‌आनमा । तथा अल्लाहभन्दा अधिक आफ्नो वचनको पालन को गर्न सक्दछ ?[3] अतः तिमी आफ्नो यस

إِنَّ اللَّهَ اشْتَرَىٰ مِنَ الْمُؤْمِنِينَ أَنفُسَهُمْ وَأَمْوَالَهُم بِأَنَّ لَهُمُ الْجَنَّةَ ۚ يُقَاتِلُونَ فِي سَبِيلِ اللَّهِ فَيَقْتُلُونَ وَيُقْتَلُونَ ۖ وَعْدًا عَلَيْهِ حَقًّا فِي التَّوْرَاةِ وَالْإِنجِيلِ وَالْقُرْآنِ ۚ وَمَنْ أَوْفَىٰ بِعَهْدِهِ مِنَ اللَّهِ ۚ فَاسْتَبْشِرُوا بِبَيْعِكُمُ الَّذِي

कर्म पाखण्ड तथा उपद्रवमा आधारित हुन्छ जुन धर्तीको त्यस क्षेत्रको जस्तो छ जसमुनि पर्वतको पानी बग्छ तथा माटोलाई सँगै बगाएर लग्छ, त्यो क्षेत्र भित्रबाट खुकुलो भएर जान्छ जसमाथि कुनै पनि निर्माण गरिन्छ भने त्यो खसिहाल्छ । यी पाखण्डीहरुको मस्जिद बनाउने कार्य पनि यस्तै हो, जुन उनीहरूलाई नरकमा सँगै लिई खस्नेछ ।

[1]हृदय खण्ड-खण्ड हुनुको अर्थ हो मृत्यु आइहालोस् । अर्थात् मृत्युसम्म यो भवन उनीहरूका हृदयमा अन्य शंका तथा भेद उत्पन्न गर्नुको साधन बनिरहने छ । जस्तो कि बाछोका पूजारीहरुमा बाछोको प्रेम बसिसकेको थियो ।

[2]यो अल्लाह तआलाको विशेष कृपा र दयाको वर्णन हो कि उसले निष्ठावानहरुलाई उनका प्राण तथा धनको साटो जुन उनीहरूले अल्लाहको मार्गमा खर्च गरे, स्वर्ग प्रदान गरिदियो, जबकि यो प्राण तथा धन पनि उसैबाट प्रदान गरिएको कुरो हो । अनि मूल्य अथवा प्रतिफल पनि जुन प्रदान गऱ्यो अर्थात् स्वर्ग त्यो अत्यन्त बहुमूल्य छ ।

[3]यो त्यसै सौदाको पुनरावृत्ति हो कि अल्लाह तआलाले यो साँचो वचन पहिलेका किताबहरुमा पनि एवं कुर्‌आनमा पनि गरेको छ, र अल्लाहभन्दा अधिक वचनलाई पूरा गर्ने को हुनसक्दछ ?

بَايَعْتُم بِهِۦ ۚ وَذَٰلِكَ هُوَ ٱلْفَوْزُ ٱلْعَظِيمُ ﴿١١١﴾

विक्रयमाथि जुन तिमीले गरेका छौ प्रफुल्ल होउ,[1] र यो ठूलो सफलता हो ।

ٱلتَّٰٓئِبُونَ ٱلْعَٰبِدُونَ ٱلْحَٰمِدُونَ ٱلسَّٰٓئِحُونَ ٱلرَّٰكِعُونَ ٱلسَّٰجِدُونَ ٱلْءَامِرُونَ بِٱلْمَعْرُوفِ وَٱلنَّاهُونَ عَنِ ٱلْمُنكَرِ وَٱلْحَٰفِظُونَ لِحُدُودِ ٱللَّهِ ۗ وَبَشِّرِ ٱلْمُؤْمِنِينَ ﴿١١٢﴾

(११२) उनीहरू यस्ता छन् जो तौबा गर्दछन् पूजा (इबादत) गर्दछन्, (ईश्वरको) महिमागान् गर्दछन्, रोज़ा (ब्रत) बस्नेवाला, (अल्लाहको मार्गमा यात्रा गर्दछन्) रूकुअ तथा ढोग गर्दछन् राम्रा कुराहरुको शिक्षा दिन्छन् तथा नराम्रा कुराबाट रोक्दछन् तथा अल्लाहका नियमहरुलाई ध्यानमा राख्नेवाला हुन् ।[2] तथा यस्ता ईमान भएकाहरुलाई शुभ-सूचना सुनाइदिनुहोस् ।[3]

[1]यो मुसलमानहरुलाई भनिंदैछ, परन्तु त्यो प्रसन्नता त्यसैबेला मनाउन सकिन्छ जब मुसलमानहरुलाई पनि यो सौदा स्वीकार्य हुन्छ । अर्थात अल्लाहको मार्गमा प्राण तथा मालको बलिदानबाट उनीहरू पछि हट्नु छैन ।

[2]यो यिनै निष्ठावानहरुका अन्य विशेषताहरुको वर्णन निरन्तर भइराखेको छ जसका प्राणहरु तथा मालको सौदा अल्लाहले गरिसकेको छ । ती तौबा गर्नेवालाहरु अर्थात् पाप तथा दोषहरुबाट । समयबद्धरुपले आफ्नो प्रभुको इबादत (उपासना) गर्ने, मुखले अल्लाहको महिमा तथा गुणहरुको वर्णन गर्ने तथा अन्य ती गुणहरुले युक्त छन् जुन आयतमा वर्णित छ । (سياحة) बाट तात्पर्य अधिकतर व्याख्याकारहरुले रोजा (ब्रत) लिएका छन् तथा यसैलाई इब्ने कसीरले अत्याधिक उचित तथा अत्याधिक प्रसिद्ध कथन भन्नुभएको छ । तथा केही ज्ञाताहरूले धर्मयुद्ध तात्पर्य लिएका छन् । तर यसबाट धर्तीको भ्रमण तात्पर्य होइन जुनप्रकार कि केही व्यक्तिहरुले बुझेका छन् । यसैप्रकार अल्लाहको इबादत (उपासना) का लागि पर्वतहरुका चुचुरा, गुफा तथा निर्जन स्थानहरुमा गई डेरा बनाइहाल्नु यसबाट तात्पर्य होइन । यसकारण कि यो त्याग तथा बैराग्यको एक भाग हो जुन इस्लाममा छैन । परन्तु उपद्रवको समयमा आफ्नो धर्मको रक्षाको लागि नगर तथा आवादिहरुलाई त्यागेर जङ्गल तथा वनहरुमा गई बस्नुको अनुमति हदीसमा दिइएको छ । (सहीह बुख़ारी किताबुल ईमान, बाब मिनद्दीन अल फ़िरार मिनल फेतन व किताबुल फ़ेतन बाबुत तअर्रूब, अइस्सुकना मअल आराब फिल फ़ितन:)

مَا كَانَ لِلنَّبِيِّ وَالَّذِينَ آمَنُوا أَنْ يَسْتَغْفِرُوا لِلْمُشْرِكِينَ وَلَوْ كَانُوا أُولِي قُرْبَىٰ مِنْ بَعْدِ مَا تَبَيَّنَ لَهُمْ أَنَّهُمْ أَصْحَابُ الْجَحِيمِ ﴿١١٣﴾

(११३) पैगम्बर तथा अन्य मुसलमानहरुलाई आज्ञा छैन कि मूर्तिपूजकहरुका लागि क्षमाको प्रार्थना गरुन् यद्यपि उनीहरु सम्बन्धि (नजिकका) नै होऊन्, जब कि यो आदेश प्रष्ट भइसकेको छ कि यी व्यक्तिहरु नरकमा जानेछन् ।[1]

وَمَا كَانَ اسْتِغْفَارُ إِبْرَاهِيمَ لِأَبِيهِ

(११४) तथा इब्राहीमको आफ्नो पिताको लागि मोक्षको प्रार्थना गर्नु मात्र वचनको

तथा अल्लाहका आदेशहरुको अवहेलना गर्ने होइन वरु तिनका रक्षक होस् । यस्ता पूर्ण ईमान भएकाहरु नै शुभ-सूचनाका अधिकारी हुन् । यो त्यही कुरा हो जसलाई कुर्आनमा (آمنوا وَعملوا الصالحات) का शब्दहरुमा पटक-पटक वर्णन गरिएको छ । यहाँ पुण्यका कार्यहरुको केही विस्तृत वर्णन गरिदिइएको छ ।

[1]यसको व्याख्या सहीह बुख़ारीमा यसप्रकार गरिएको छ कि जब नवी सल्लल्लाहु अलैहि वसल्लमका प्रिय काका अबू तालिबको अन्तिम समय आयो तब नवी सल्लल्लाहु अलैहि वसल्लम उनीका छेउ गए जबकि उनको पासमा अबू जहल तथा अब्दुल्लाह बिन अबी उमैय्या पनि बसेका थिए । उहाँले भन्नुभयो, "काका (لا إله إلا الله) पढिहाल्नुस् ताकि म अल्लाहको सामु तपाईंको लागि तर्क प्रस्तुत गर्न सकूँ ।" अबू जहल तथा अब्दुल्लाह बिन अबी उमैय्याले भने, "हे अबू तालिब ! के अब्दुल मुत्तलिबको धर्मबाट मुख फर्काउनेछौ ? (अर्थात् मर्नेबेला यो के गर्न लाग्यौ ? यहाँसम्मकि यसै अवस्थामा उनको मृत्यु भयो)" नवी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "जबसम्म अल्लाह तआलाको तर्फबाट मलाई रोकिने छैन, म तपाईंको लागि क्षमा-याचना गरिरहने छु" जसपश्चात यो आयत अवतरित भयो जसमा मूर्तिपूजकहरुका लागि मोक्षको प्रार्थनाबाट रोकियो । (सहीह बुख़ारी, किताबुत् तफ़सीर, सूरः तौबः) सूरः कससको आयत ५६ (إِنَّكَ لَا تَهْدِي مَنْ أَحْبَبْتَ) पनि यसै सम्बन्धमा अवतरित भयो । मुसनद अहमदको एक कथनमा छ कि नवी सल्लल्लाहु अलैहि वसल्लमले आफ्नी आमाका लागि मोक्षको प्रार्थना गर्ने आज्ञा माँग्नु भयो, जसमाथि यो आयत उत्र्यो । (मुसनद अहमद भाग ५, पृष्ठ ३५५) तथा नवी स.अ.व.स.ले आफ्ना मूर्तिपूजक समुदायका लागि प्रार्थना गर्नुभएको थियो । (اللَّهُمَّ اغْفِرْ لِقَوْمِي فَإِنَّهُمْ لَا يَعْلَمُونَ) "हे अल्लाह मेरो समुदाय अज्ञानी छ, यसलाई क्षमा गरिदेउ ।" यो आयतको विपरीत छैन । यसकारण कि यसको अर्थ उनको मार्गदर्शनको प्रार्थना हो । अर्थात् उनीहरु मेरो पद तथा गरिमासित अनभिज्ञ छन् । यसलाई मार्गदर्शन प्रदान गर ताकि मोक्षका पात्र बन्न सकून् । तथा जीवित काफ़िर तथा मूर्तिपूजकहरुका लागि मार्गदर्शनको प्रार्थना उचित छ ।

إِلَّا عَن مَّوْعِدَةٍ وَعَدَهَا إِيَّاهُ فَلَمَّا تَبَيَّنَ لَهُ أَنَّهُ عَدُوٌّ لِّلَّهِ تَبَرَّأَ مِنْهُ ۚ إِنَّ إِبْرَاهِيمَ لَأَوَّاهٌ حَلِيمٌ ﴿١١٤﴾

कारण थियो, जुन उनले उसलाई दिनु भएको थियो । अनि जब उनलाई यो कुरा स्पष्ट भयो कि त्यो अल्लाहको शत्रु हो, मात्र उहाँ उससित असम्बन्धित भइहाले,[१] वास्तवमा इब्राहीम बडो कोमल हृदय भएको सहनशील थिए ।[२]

وَمَا كَانَ اللَّهُ لِيُضِلَّ قَوْمًا بَعْدَ إِذْ هَدَاهُمْ حَتَّىٰ يُبَيِّنَ لَهُم مَّا يَتَّقُونَ ۚ إِنَّ اللَّهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿١١٥﴾

(११५) तथा अल्लाह यस्तो गर्दैन कि कुनै समुदायलाई मार्गदर्शन दिए पश्चात विचलित गरिदेओस् जबसम्म ती कुराहरुलाई स्पष्टरुपले भनेको हुँदैन जसबाट उनीहरु बचून् ।[३] निःसन्देह अल्लाह प्रत्येक वस्तुलाई राम्ररी जान्दछ ।

إِنَّ اللَّهَ لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ ۖ يُحْيِي وَيُمِيتُ ۚ وَمَا لَكُم مِّن دُونِ اللَّهِ مِن وَلِيٍّ وَلَا نَصِيرٍ ﴿١١٦﴾

(११६) निःसन्देह अल्लाहकै राज्य छ आकाशहरु तथा धर्तीमा । त्यसैले जीवित राख्दछ तथा मार्दछ, र तिम्रो, अल्लाहका अतिरिक्त न कोही मित्र छ न कोही सहायता गर्नेछ ।

[१]आदरणीय इब्राहीमलाई पनि जब यो कुरा स्पष्ट भयो कि मेरो पिता अल्लाहको शत्रु हो तथा नरकमा जानेछ, त उनी उसबाट अलग भए तथा त्यसपश्चात मोक्षको प्रार्थना गरेनन् ।

[२]तथा प्रारम्भमा आफ्नो पिताको लागि मोक्षको प्रार्थना पनि आफ्नो यसै मृदल एवं संयमी स्वभावका कारणले थियो ।

[३]जब अल्लाह तआ़लाले मूर्तिपूजकहरुको पक्षमा क्षमादान गर्न प्रार्थनाबाट रोक्यो तव केही सहाबालाई जसले यस्तो गरेका थिए, यो शंका उत्पन्न भयो कि कहीं उनले मार्ग-विचलनको कार्य त गरेनन् । अल्लाह तआ़लाले भन्नुभयो कि त्यसले जवसम्म वच्ने कार्यहरुको स्पष्टीकरण गर्दैन, त्यसबखतसम्म त्यसमाथि पकड पनि गर्दैन, तथा न त्यसलाई मार्ग-विचलन सिद्ध गर्दछ । परन्तु जब ती कार्यहरुबाट पन्छिदैन, जसवाट मनाही गरिसकिएको, त त्यसलाई अल्लाह तआ़ला विपथ गरिदिन्छ । यसकारण जुन व्यक्तिहरुले यसभन्दा पूर्व आफ्ना मृतक सम्बन्धिहरुका लागि क्षमाका प्रार्थना गरेका छन्, उनको पकड हुनेछैन, किनभने उनलाई त्यस समय नियमको ज्ञान थिएन ।

لَقَدْ تَابَ اللّٰهُ عَلَى النَّبِيِّ وَالْمُهٰجِرِيْنَ وَالْاَنْصَارِ الَّذِيْنَ اتَّبَعُوْهُ فِيْ سَاعَةِ الْعُسْرَةِ مِنْۢ بَعْدِ مَا كَادَ يَزِيْغُ قُلُوْبُ فَرِيْقٍ مِّنْهُمْ ثُمَّ تَابَ عَلَيْهِمْ ۗ اِنَّهٗ بِهِمْ رَءُوْفٌ رَّحِيْمٌ ﴿١١٧﴾

(११७) अल्लाह (तआला) ले पैग़म्बर (ईशदूत) को दशामाथि ध्यान दियो तथा मोहाजिरहरू एवं अन्सारको दशामा पनि जसले यस्ता कठिनाईको समयमा पैग़म्बरको साथ दिए[1] त्यस पश्चात उनीहरुमध्ये एउटा समूहका हृदय कुटिलतातिर लागेका थिए[2] तर अल्लाहले उनीहरुको दशामाथि दया गऱ्यो। निःसन्देह अल्लाह तआला उनी सबैमाथि अत्याधिक दयालु एवं कृपालु छ।

وَّعَلَى الثَّلٰثَةِ الَّذِيْنَ خُلِّفُوْا ۗ

(११८) तथा तीन व्यक्तिहरुको स्थितिमाथि पनि जसको मामिला (कुरा) स्थगित गरिदिइएको थियो।[3]

[1]तबूकको युद्धको यात्रालाई कठिनाई (कष्ट) को समय भनिएको छ। यसकारण कि एक त चर्को घामको समय थियो, अर्को, फसलहरु तैयार थिए, तेस्रो यात्रा लामो थियो तथा चौथो साधनको कमी थियो। यसकारण यसलाई (جيش العسرة) (कठिनाई को यात्रा अथवा सेना) भनिन्छ। तौबाको लागि आवश्यक छैन कि पहिला पाप तथा त्रुटिपूर्ण कार्य होऊन्। यो नभए पनि सम्मान प्राप्त गर्नको लागि तथा अन्जानमा हुनसक्ने त्रुटिहरुको लागि तौबा हुन्छ। यहाँ मोहाजिरहरु तथा अन्सारका यस पहिला समूहको तौबा यसै भावमा छ, जो बिना कुनै आनाकानी (आल-टाल) नबी सल्लल्लाहु अलैहि वसल्लमको आदेशमा धर्मयुद्धका लागि तैयार भए।

[2]यो त्यस अर्को गुटको वर्णन हो जसलाई उपरोक्त कारणहरुले प्रारम्भमा आलस्य भयो। परन्तु पछि शीघ्र नै त्यो यस अवस्थामा निस्क्यो तथा प्रसन्नताले धर्मयुद्धमा सम्मिलित भयो। हृदयहरुमा आनाकानीसित तात्पर्य धर्मको विषयमा कुनै प्रकारको कम्पन, आनाकानी अथवा शंका होइन बरु वर्णित संसारिक कारणहरुको आधारमा धर्मयुद्धमा सम्मिलित हुनका लागि जुन दुबिधा तथा आलस्य थियो त्यो तात्पर्य हो।

[3](خُلِّفُوْا) को त्यही अर्थ हो जुन (مُرْجَوْنَ) को हो अर्थात जसको मामिला (कुरा) स्थगित गरिदिइएको थियो तथा पचास दिन पश्चात उनको तौबा स्वीकार भयो। यी तीन सहाबा थिए काअबा बिन मालिक, मुरारः बिन रबिअ तथा हिलाल बिन उमैय्या। यी पक्का मुसलमान थिए। यसभन्दा पूर्व प्रत्येक धर्मयुद्धमा सम्मिलित हुँदै गरे। यस तबूकको धर्मयुद्धमा आलस्यका कारण सम्मिलित हुन सकेनन्। पछि उनीहरुलाई आफ्नो गल्तीको आभास भयो। उनले बिचार गरे कि एउटा त्रुटि (पछि पर्नुको) त भई नै हाल्यो। परन्तु पाखण्डीहरुका समान अब रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका समक्ष झूठा तर्क प्रस्तुत गर्नेछैन। अतः

حَتّٰۤى اِذَا ضَاقَتْ عَلَيْهِمُ الْاَرْضُ بِمَا رَحُبَتْ وَضَاقَتْ عَلَيْهِمْ اَنْفُسُهُمْ وَظَنُّوْۤا اَنْ لَّا مَلْجَاَ مِنَ اللّٰهِ اِلَّاۤ اِلَيْهِ ؕ ثُمَّ تَابَ عَلَيْهِمْ لِيَتُوْبُوْا ؕ اِنَّ اللّٰهَ هُوَ التَّوَّابُ الرَّحِيْمُ ﴿۱۱۸﴾

यहाँसम्मकि जब धर्ती आफ्नो विस्तारको उपरान्त पनि उनका लागि संकुचित हुनथाल्यो तथा उनी स्वयं आफ्ना अस्तित्वबाट दिक्दार भए ।[1] तथा उनले बुझे कि अल्लाहबाट कहीं शरण प्राप्त हुनसक्दैन यसबाहेक कि उसैतिर फर्कियोस्, अनि उनको अवस्थामाथि दया गऱ्यो ताकि उनी भविष्यमा पनि तौबा गर्न सकून् ।[2] निःसन्देह अल्लाह तआला अत्याधिक दयावान् अत्याधिक दयालु छ ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اتَّقُوا اللّٰهَ وَكُوْنُوْا مَعَ الصّٰدِقِيْنَ ﴿۱۱۹﴾

(११९) हे निष्ठावानहरु ! अल्लाह (तआला) सित तर्स तथा सत्यवादीसँग रह ।[3]

---

[1]उपस्थित भई आफ्नो त्रुटिलाई स्पष्टरूपले अंगीकार गरे तथा उसको दण्डको लागि स्वयं आफूलाई प्रस्तुत गरिदिए । नबी सल्लल्लाहु अलैहि वसल्लमले उनका कुरालाई अल्लाहमाथि छाडिदिनु भयो कि त्यो उनको विषयमा कुनै आदेश अवतरित गर्नेछ । तैपनि त्यस अवधिमा उहाँ सल्लल्लाहु अलैहि वसल्लम सहाबा केरामलाई यी तीनटैसँग सम्बन्ध राख्न यहाँसम्मकि कुराकानी गर्न पनि रोकदिनु भयो तथा चालीस रातहरुका पश्चात उनीहरुलाई आदेश दिइयो कि उनी आफ्ना पत्नीहरुबाट पनि टाढा रहून् । अतः पत्नीहरुबाट पनि बियोग भयो तथा दस दिन व्यतीत भए पश्चात तौबा स्वीकार गरियो तथा वर्णित आयत अवतरित भयो । यस घटनाको विस्तृत जानकारी आदरणीय काब बिन मालिकको भनाई अनुसार हदीसमा विद्यमान छ । हेर्नुस् (सहीह बुख़ारी किताबुल मग़ाजी बाब ग़जवः तबूक र मुस्लिम किताबुत तौबः बाब हदीस तोबते काअब बिन मालिक)

[2]यो ती दिनहरुको वर्णन हो जसबाट सामाजिक बहिष्कारका कारण उनीहरुले भोग्नुपरेको थियो ।

[3]अर्थात् पचास दिन पश्चात अल्लाह तआलाले उनको विनय तथा तौबा (क्षमा-याचना) स्वीकार गऱ्यो ।

[4]सत्यताको कारण नै अल्लाह तआलाले यी तीन सहाबीहरुका त्रुटिहरुलाई न केवल क्षमा गऱ्यो बरु उनको तौबालाई आयत बनाएर अवतरित गऱ्यो (رَضِيَ اللهُ عنهم ورَضوا عنه) यसकारण ईमान भएकाहरुलाई आदेश दिइयो कि अल्लाहसित तर्स र सत्य मानिसहरुको साथमा रह । यसको अर्थ यो हो कि जसको हृदयमा तक़्वा (अर्थात् अल्लाहको भय) हुनेछ, त्यो साँचो हुनेछ तथा जो झूठा हुनेछ, बुझिहाल कि त्यसको हृदय तक़्वाबाट

مَا كَانَ لِأَهْلِ الْمَدِينَةِ وَ مَنْ حَوْلَهُمْ مِّنَ الْأَعْرَابِ أَنْ يَّتَخَلَّفُوْا عَنْ رَّسُوْلِ اللّٰهِ وَلَا يَرْغَبُوْا بِأَنْفُسِهِمْ عَنْ نَّفْسِهٖ ؕ ذٰلِكَ بِأَنَّهُمْ لَا يُصِيْبُهُمْ ظَمَأٌ وَّلَا نَصَبٌ وَّلَا مَخْمَصَةٌ فِيْ سَبِيْلِ اللّٰهِ

(१२०) मदीना तथा त्यसका छिमेकका ग्रामवासीहरुका लागि उचित थिएन कि रसूलुल्लाहको साथ छाडेर पछाडि रहनू[1] तथा न यो कि आफ्ना प्राणलाई उनको प्राणभन्दा अधिक प्रिय ठानून्[2] यसकारणले कि[3] उनलाई अल्लाहको मार्गमा जुन तिर्खा लाग्यो तथा जुन थकाई पुग्यो एवं जुन भोक लाग्यो तथा जुन हिंडाइ गरे, जुन काफ़िरहरुका लागि क्रोधका

शून्य छ । यसैकारण हदीसमा वर्णित छ कि मोमिनबाट केही अन्य त्रुटिहरु त हुनसक्छन्, परन्तु त्यो झूठा हुँदैन ।

[1]तबूकका युद्धका लागि सामान्य रुपले घोषणा गरिएको थियो, यसकारण विवश, बृद्ध तथा अन्य धार्मिक कारण भएका बाहेक सबैको लागि यसमा सम्मिलित हुनु आवश्यक थियो, तर तैपनि जो मदीनावासी तथा मदीनाका निकटवर्ती क्षेत्रका निवासी धर्मयुद्धमा सम्मिलित भएनन् अल्लाह तआला उनीहरुलाई सावधान गर्दै तथा चेतावनी दिदै भनिराखेको छ कि उनीहरुलाई रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमबाट पछाडी रहनु हुँदैनथ्यो ।

[2]अर्थात् यो उनको लागि शोभा दिदैन कि स्वयं आफ्ना प्राणहरुको सुरक्षा गरुन् तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको प्राणको सुरक्षाको उनीहरुलाई ध्यान पनि नहोस्, बरु उनीहरुलाई रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसँग रहेर आफ्नो भन्दा अधिक उनको सुरक्षाको प्रबन्ध गर्नुपर्छ ।

[3](ذٰلِكَ) बाट पछि नरहनुको कारण भनिएको छ कि उनीहरुलाई यसकारण पछि रहनु हुँदैन कि अल्लाहको मार्गमा उनीहरुलाई जुन तिर्खा, थकाई, भोक पुग्नेछ अथवा यस्ता कार्य जसबाट काफ़िरहरुको क्रोध बढोस्, यसैप्रकार शत्रुहरुका मानिसलाई वध गर्नु अथवा बन्दी बनाउनु, यो सबै कार्य पुण्य कर्म लेखिनेछन् अर्थात् पुण्यको कार्य मात्र यही होइन कि कोही मस्जिदमा अथवा कुनै एक कुनामा बसेर ऐच्छिक नमाज़ पढोस्, कुरआन पढोस्, अल्लाहलाई स्मरण गरोस् आदि बरु धर्मयुद्धमा घटित हुने कठिनाई तथा दुखहरु यहाँसम्मकि ती योजनाहरु जसबाट शत्रुहरुका हृदयमा भय उत्पन्न होस् अथवा उत्तेजित होऊन्, यिनीमध्ये प्रत्येक काम अल्लाहको समक्ष पुण्यका कर्महरुमा लेखिनेछ । यसकारण मात्र उपासनाको अभिलाषामा पनि धर्मयुद्धबाट पन्छिनु उचित छैन तब अकारणहरु नै मनुष्य धर्मयुद्धबाट टाढा किन ?

وَلَا يَطَـُٔونَ مَوْطِئًا يَغِيظُ الْكُفَّارَ وَلَا يَنَالُونَ مِنْ عَدُوٍّ نَّيْلًا إِلَّا كُتِبَ لَهُم بِهِ عَمَلٌ صَالِحٌ ۚ إِنَّ اللَّهَ لَا يُضِيعُ أَجْرَ الْمُحْسِنِينَ ﴿١٢٠﴾

कारण भएको होस्,[1] तथा शत्रुहरुको जे-जति सूचना लिए,[2] ती सबैको लागि उनीहरुका नाममा (एउटा-एउटा) पुण्य कार्य लेखियो। नि:सन्देह अल्लाह तआला नि:स्वार्थीहरुको प्रतिफल नष्ट गर्दैन।

وَلَا يُنفِقُونَ نَفَقَةً صَغِيرَةً وَلَا كَبِيرَةً وَلَا يَقْطَعُونَ وَادِيًا إِلَّا كُتِبَ لَهُمْ لِيَجْزِيَهُمُ اللَّهُ أَحْسَنَ مَا كَانُوا يَعْمَلُونَ ﴿١٢١﴾

(१२१) तथा जे पनि सानो तथा ठूलो उनीहरुले खर्च गरे तथा जति मैदान (फाँट) उनीहरुलाई पार गर्नुपर्‍यो,[3] यो सबै उनको नाममा लेखियो ताकि अल्लाह (तआला) उनका कामहरुको निकै राम्रो प्रतिफल प्रदान गरोस्।

وَمَا كَانَ الْمُؤْمِنُونَ لِيَنفِرُوا كَافَّةً ۚ فَلَوْلَا نَفَرَ مِن كُلِّ فِرْقَةٍ مِّنْهُمْ طَائِفَةٌ لِّيَتَفَقَّهُوا فِي الدِّينِ وَلِيُنذِرُوا قَوْمَهُمْ إِذَا رَجَعُوا

(१२२) तथा यस्तो होइन कि सबै मुसलमानहरू एकै चोटी निस्किहालुन् तसर्थ यस्तो किन नगरियोस् कि उनको प्रत्येक ठूलो गुटबाट सानो गुट जाने गरोस् ताकि उनी धर्मलाई सम्झी-बुझी प्राप्त गरुन् र ताकि यी

[1]यसबाट तात्पर्य पैदल अथवा घोडाहरु आदिमा सवार भएर यस्ता क्षेत्रहरुबाट गुज्रनु कि तिनका पाइलाका चाप तथा घोडाहरुका खुट्टाको आवाजबाट शत्रुहरुका हृदय काम्न थालून् तथा उनमा क्रोधको आगो प्रज्वलित होस्।

[2](ولا ينالُون من عدوّ نيلا) (शत्रुहरुबाट कुनै वस्तु लिन्छन् अथवा उनका समाचार लिन्छन्) सित तात्पर्य उनका मानिसहरुलाई मार्दछन् तथा बन्दी बनाउँदछन्, उनलाई पराजित गर्दछन् तथा परिहार युद्धमा पाएको सामग्री प्राप्त गर्दछन्।

[3]पर्वतहरुका बीच मैदान तथा पानीको निकासको मार्गलाई घाटी भन्दछन्। यहाँ तात्पर्य साधारण घाटीहरु तथा क्षेत्र हुन्। अर्थात् अल्लाह तआलाका मार्गमा कम अथवा अधिक जति पनि खर्च गर्नेछौ, यसैप्रकार जतिपनि मैदान तथा क्षेत्र पार गर्नेछौ (अर्थात् धर्मयुद्धमा सानो अथवा लामो यात्रा गर्नेछौ) यो सबै पुण्य तिम्रो कर्मपत्रमा अङ्कित हुनेछन्, जसकारण अल्लाह तआलाले राम्रोभन्दा राम्रो प्रतिफल प्रदान गर्नेछ।

إِلَيْهِمْ لَعَلَّهُمْ يَحْذَرُونَ

मानिसहरु आफ्ना समुदायलाई जबकि उनीहरु तिनका निकट आउँछन्, भय सृष्टि गरुन् ताकि उनीहरू तर्सुन् ।[1]

يَا أَيُّهَا الَّذِينَ آمَنُوا قَاتِلُوا الَّذِينَ

(१२३) हे निष्ठावानहरु ! ती काफ़िरहरुसित लड जो तिम्रा आसपासमा छन् ।[2] तथा उनीहरूले

[1]केही व्याख्याकारहरुका निकट यसको पनि सम्बन्ध धर्मयुद्धको आदेशसित छ। तथा अर्थ यो हो कि पछिल्ला आयतहरुमा पछाडी रहनेहरुका लागि कडा चेतावनी तथा भ्रपारको वर्णन गरियो तब सहाबा क़िराम अति सतर्क भए तथा जहिलेपनि धर्मयुद्धका कुरा आउँदा सबै सम्मिलित हुन प्रयत्न गर्दथे। आयतमा उनीहरुलाई आदेश दिइदैछ कि प्रत्येक धर्मयुद्ध यसप्रकारको हुँदैन कि प्रत्येक व्यक्तिलाई साथ लिनु आवश्यक होस् (जस्तो कि तबूकमा आवश्यक थियो) वरु एकै गुटलाई सम्मिलित हुन पर्याप्त छ। उनका निकट (لِيَتَفَقَّهُوا) सित सम्वोधित पछि रहेका समुह हो। अर्थात एउटा समुह धर्मयुद्धमा जाओस् (وتَبقى طائفة) (यो लुप्त हुनेछ) तथा एउटा समुह पछि रहेका जसले धर्म शिक्षा प्राप्त गरोस् तथा जब मुजाहिदीन (धर्मयुद्धका सैनिक) फर्केर आउँछन् त उनीहरुलाई पनि धर्मका नियमहरुसित परिचित गराएर अल्लाहसित तर्साऊन्। दोस्रो व्याख्या यो हो कि यस आयतको सम्वन्ध धर्मयुद्धसित छैन, वरु यसमा धर्मको शिक्षा प्राप्त गर्ने कुराको महत्वको वर्णन छ, त्यसको प्रोत्साहन तथा मार्गको स्पष्टीकरण छ तथा त्यो यो हो कि प्रत्येक ठूलो गुट अथवा कवीला मध्येवाट केही मानिसहरु धर्मको शिक्षा प्राप्त गर्नको निम्ति आफ्ना घर छाडून् तथा मदरसा तथा धार्मिक शिक्षा केन्द्रहरुमा गई त्यसलाई प्राप्त गरून् तथा पुन: फर्केर आएपछि आफ्नो समाजका समक्ष भाषण तथा दीक्षा देऊन् धर्ममा (تفقه) प्राप्त गर्नाको अर्थ आदेश एवं मनाहीका नियमहरुको शिक्षा प्राप्त गर्नु हो ताकि अल्लाहका आदेशको पालना गर्न सकोस् तथा वातावरणको नराम्रो कुरावाट अलग्ग रहोस् बाँचिरहोस् तथा आफ्ना समाजका मानिसहरुलाई भलाईको आदेश देओस् तथा नराम्रो कुरावाट रोकोस्।

[2]यसमा काफ़िरहरुसित लड्नुको एउटा महत्वपूर्ण नियमको वर्णन गरिएको छ कि (الأول فالأول الأقرب فالأقرب) का अनुसार काफ़िरहरुसित धर्मयुद्ध गर्नुछ जस्तो कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले प्रथम अरव द्वीपमा निवास गर्ने मूर्तिपूजकहरुसित युद्ध गर्नुभयो, त्यहाँवाट उम्केपछि, अल्लाह तआलाले मक्का, तायफ़, यमन, यमामा, हिज्र, ख़ैवर, हजरमुत आदि स्थानहरुमा मुसलमानहरुको अधिपत्य कायम गऱ्यो तथा अरवका सारा कवीलाहरु समूह-समूह गरी इस्लाम धर्ममा प्रवेश गर्नथाले। अनि पुन: अहले कितावसित युद्ध प्रारम्भ गर्नुभयो तथा ९ हिज़रीमा रोमवासीहरुसित युद्ध गरी तबूकतिर प्रस्थान गरे, जुन अरब महाद्वीपको निकट छ। यसैको आधारमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमका मृत्यु पश्चात खुलफ़ाये राशदीनले रोमका ईसाइहरुसित युद्ध गरे तथा ईरानका अग्निपूजकहरुसित युद्ध गरे।

يَلُوْنَكُمْ مِّنَ الْكُفَّارِ وَلْيَجِدُوْا فِيْكُمْ غِلْظَةً ۭ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ مَعَ الْمُتَّقِيْنَ ﴿١٢٣﴾

तिमी भित्र कठोरता पाउनु पर्छ ।[1] तथा यो विश्वास गर कि अल्लाह तआ़ला तक्वा (संयम) भएकाहरुको साथमा छ ।

وَاِذَا مَآ اُنْزِلَتْ سُوْرَةٌ فَمِنْهُمْ مَّنْ يَّقُوْلُ اَيُّكُمْ زَادَتْهُ هٰذِهٖٓ اِيْمَانًا ۚ فَاَمَّا الَّذِيْنَ اٰمَنُوْا فَزَادَتْهُمْ اِيْمَانًا وَّهُمْ يَسْتَبْشِرُوْنَ ﴿١٢٤﴾

(१२४) तथा जब कुनै सूर: अवतरित गरिन्छ त केही (द्वयवादी) भन्दछन् कि यस सूर:ले तिमीहरुमध्ये कसको ईमानलाई बृद्धि गरेको छ ?[2] त जुन मानिसहरु ईमान्दार छन्, यस सूर:ले उनको ईमानमा प्रगति प्रदान गरेको छ तथा उनी आनन्द मनाईराखेका छन् ।[3]

وَاَمَّا الَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ فَزَادَتْهُمْ رِجْسًا اِلٰى رِجْسِهِمْ وَمَاتُوْا وَهُمْ كٰفِرُوْنَ ﴿١٢٥﴾

(१२५) तथा जसका हृदयहरुमा रोग छ, यस सूर:ले उनीहरूको मलीनतामा अभिबृद्धिका साथ अरु मलीनतामा बृद्धि गरिदिएको छ तथा उनी कुफ्रको अवस्थामा नै मरे ।[4]

---

[1]अर्थात् काफ़िरहरुका लागि मुसलमानहरुका हृदयमा कुनै प्रकारको कोमलता हुनुहुँदैन । कठोरता हुनुपर्छ, जस्तो कि "(أَشِدَّآءُ عَلَى الْكُفَّارِ رُحَمَآءُ بَيْنَهُمْ) मा सहाबाहरुका गुणको वर्णन छ । यसैप्रकार सूर: अल्-मायद:, ५४ मा ईमान भएकाहरुका गुण छन् ।" ( أذلة على المؤمنين أعزة على الكافرين )

[2]यस सूर:मा पाखण्डीहरुका जुन कर्महरुको वर्णन गरिएको छ, यी आयतहरु उनका परिशिष्ट एवं पूरक हुन् । यसमा भनिंदैछ कि जब उनको अनुपस्थितिमा कुनै सूर: अथवा त्यसको कुनै भाग अवतरित हुन्थ्यो तथा उनको ज्ञानमा कुरा आउँथ्यो, तब उनी उपहास तथा परिहासको रुपमा एक-अर्कासित भन्थे कि यसबाट तिमीहरुमध्ये कसको ईमानमा अधिकता भयो ?

[3]अल्लाह तआ़लाले भन्नुभयो, जुन पनि सूर: अवतरित हुन्छ त्यसबाट ईमान भएकाहरुको ईमानमा अवश्य अधिकता हुन्छ तथा उनी आफ्ना ईमानको उन्नतिमा प्रसन्न हुन्छन् । यो आयत पनि यसै कुराको प्रमाण हो कि ईमानमा कमी तथा अधिकता हुन्छ जुनप्रकारले मुहद्देसीनको विचार छ ।

[4]रोगसित तात्पर्य द्वयवाद तथा अल्लाहका आयतहरुको विषयमा शंका तथा सन्देह हो । आदेश भयो "तर यो सूर: पाखण्डीहरुको उनका पाखण्ड तथा दुष्टतामा अधिकता गर्दछ तथा उनी आफ्ना कुफ्र तथा मिथ्याचारमा यसप्रकार दृढ हुन्छन् कि उनीहरुलाई तौबाको सौभाग्य हुँदैन तथा कुफ्र (अधर्म) मा नै

أَوَلَا يَرَوْنَ أَنَّهُمْ يُفْتَنُونَ فِي كُلِّ عَامٍ مَّرَّةً أَوْ مَرَّتَيْنِ ثُمَّ لَا يَتُوبُونَ وَلَا هُمْ يَذَّكَّرُونَ ﴿١٢٦﴾

(१२६) तथा के उनको आँखाले देख्दैन कि यिनीहरु प्रत्येक वर्ष एक पटक अथवा दुई पटक कुनै न कुनै आपत्तिमा पारिन्छन्, तैपनि न त प्रायश्चित गर्दछन् न शिक्षा ग्रहण गर्दछन् ।[1]

وَإِذَا مَا أُنزِلَتْ سُورَةٌ نَّظَرَ بَعْضُهُمْ إِلَىٰ بَعْضٍ هَلْ يَرَاكُم مِّنْ أَحَدٍ ثُمَّ انصَرَفُوا ۚ صَرَفَ اللَّهُ قُلُوبَهُم بِأَنَّهُمْ قَوْمٌ لَّا يَفْقَهُونَ ﴿١٢٧﴾

(१२७) तथा जब कुनै सूरः अवतरित गरिन्छ त एक-अर्कालाई हेर्न थाल्छन् कि तिमीलाई कसैले देखि राखेको त छैन अनि मोडिएर हिंड्दिन्छन् ।[2] अल्लाह (तआला) ले उनका हृदयलाई मोडिदिएको छ। यसकारण कि उनीहरु यस्ता मानिसहरू बुझ्दैनन् ।[3]

لَقَدْ جَاءَكُمْ رَسُولٌ مِّنْ أَنفُسِكُمْ

(१२८) तिम्रो पासमा एउटा यस्तो पैगम्बर (ईशदूत) को आगमन भएको छ, जो तिमीमध्येबाटै

उनको अन्त हुन्छ ।" जसरी अल्लाह तआलाले अन्य ठाउँमा आदेश गरेको छ, "हामी कुर्आनमा यस्ता कुरा अवतरित गर्दछौं जुन ईमानवालाहरुका लागि स्वास्थ्यवर्धक तथा कृपा हो। तर अल्लाह तआला तिनीबाट अत्याचारीहरुको हानिमा वृद्धि गर्दछ ।" (सूरः बनी इस्राईल-८२) यो जस्तो कि उनको दुर्भाग्यको चरम सीमा हो कि जसबाट मानिसहरुका हृदय मार्गदर्शन पाउँछन् तिनै कुरा उनका अपमान, अनादर, हानि तथा अन्तका कारण बन्दछन् । जुनप्रकारले कुनै पनि व्यक्तिको पाचनक्रिया बिग्रन्छ भने त्यो भोजन जसबाट अन्य मानिसहरु शक्ति तथा स्वाद प्राप्त गर्दछन्, त्यसको रोगमा झन् बिगाड तथा नराम्रोपनाको कारण बन्दछ ।

[1](يُفْتَنُونَ) को अर्थ हो, परीक्षा लिईन्छ। आपत्तिबाट तात्पर्य या त आकाशीय प्रकोप हो । जस्तो अकाल आदि (परन्तु यो टाढा छ) अथवा शारीरिक रोग तथा दुख हुन् अथवा युद्ध हुन् जसमा सम्मिलित हुने अवसरमा उनको परीक्षा हुन्छ ।

[2]अर्थात् उनको उपस्थितिमा सूरः उत्रन्थ्यो जसमा पाखण्डीहरुका दुराचार एवं षड्यन्त्रहरुतिर संकेत हुन्थ्यो तब यो देखेर कि मुसलमान उनलाई देखिराखेको त छैन, चुपचाप हिंडिहाल्थे ।

[3]अर्थात् अल्लाहका आयतहरुमा चिन्तन-मनन तथा विचार नगर्नुका कारण अल्लाह तआलाले उनका हृदयलाई पुण्य तथा भलाईका कार्यहरुबाट बिमुख गरिदिएको छ।

عَزِيزٌ عَلَيۡهِ مَا عَنِتُّمۡ حَرِيصٌ عَلَيۡكُم بِٱلۡمُؤۡمِنِينَ رَءُوفٞ رَّحِيمٞ ۝١٢٨

हुन्,[1] जसलाई तिम्रा हानिका कुरा असहाय लाग्दछन्,[2] जो तिम्रो लाभका लागि बडो इच्छुक रहन्छन्,[3] ईमान भएका लागि अत्यन्तै करुणाकारी कोमल हृदय छन् ।[4]

فَإِن تَوَلَّوۡاْ فَقُلۡ حَسۡبِيَ ٱللَّهُ لَآ إِلَٰهَ إِلَّا هُوَۖ عَلَيۡهِ تَوَكَّلۡتُۖ

(१२९) अनि यदि मुख फर्काउन्छन्[5] भने (तपाईं) भनिदिनुस् कि मेरो लागि अल्लाह पर्याप्त छ,[6] त्यसको अतिरिक्त कोही सत्य पूज्य छैन । मैले उसै

[1]सूरःको अन्तमा मुसलमानहरुमाथि नबी सल्लल्लाहु अलैहि वसल्लमको रूपमा जुन महान उपकार गरिएको छ त्यसको वर्णन गरिदैछ । उहाँ सल्लल्लाहु अलैहि वसल्लमको प्रथम विशेषता यो वर्णन गरिदैछ कि उनी तिम्रै जातिबाट हुन् अर्थात् पुरुषको रूपमा छन् (उनी दिव्य प्रकाश अथवा अन्य केही होइनन्) जस्तो कि दुर्आस्थाका शिकार मानिसहरु जनतालाई यसप्रकारका कुरामा फँसाउँछन् ।

[2](عنتٌ) यस्ता कुराहरु जसबाट मनुष्यलाई दुख होस्, यसमा सांसारिक दुख तथा आख़िरतका यातना दुबै आउँछन् । यस पैग़म्बरलाई तिम्रा हरप्रकारका कठिनाई तथा कष्ट दुखदायी हुन्छन् । यसैकारण उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "म सरल धर्म एकेश्वरबाद प्रदान गरिएर पठाइएका हूँ ।"(मुसनद अहमद भाग-५, पृष्ठ-२६६, भाग-६, पृष्ठ-२३३) एक अन्य हदीसमा भन्नुभएको छ (إِنَّ هذا الدِّينَ يُسرٌ) (सहीह बुख़ारी किताबुल ईमान) यो धर्म सरल छ ।

[3]तिम्रा मार्गदर्शन तथा तिम्रा सांसारिक तथा पारलौकिक लाभको कामना गर्नेहरू हुन् । तिमी नरक़मा जानु प्रिय ठान्दैनन् । यसैले उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "म तिमीलाई तिम्रा पिठ्यूँ समाति-समाति तान्दछु तर तिमी म बाट तर्केर स्वयं नै नरकको आगोमा प्रवेश गर्दछौ ।" (सहीह बुख़ारी किताबुल रिकाक बाबुल इन्तेहाये मिनल मआसी)

[4]उहाँ सल्लल्लाहु अलैहि वसल्लमको चौथो विशेषताको वर्णन गरिएको हो । यी सबै विशेषताहरु उहाँका उच्च व्यवहार तथा नम्र स्वभावको सूचक हो । निःसन्देह उहाँ सल्लल्लाहु अलैहि वसल्लम अत्यन्त सुशील हुनुहुन्छ । सल्लल्लाहु अलैहि वसल्लम ।

[5]अर्थात् उहाँ सल्लल्लाहु अलैहि वसल्लमबाट ल्याइएका धार्मिक नियम तथा शान्ति धर्मबाट ।

[6]जो कुफ्र तथा विमुख हुनेहरुको पाखण्ड तथा षड्यन्त्रबाट मलाई बचाउनेछ ।

وَهُوَ رَبُّ الْعَرْشِ الْعَظِيمِ ﴿١٢٩﴾

माथि भरोसा गरें तथा त्यो विशाल अर्श (सिंहासन) को मालिक (स्वामी) छ ।[1]

## سُورَةُ يُونُسَ

## सूरतु यूनुस-१०

सूरः यूनुस मक्कामा उतारिएको[2] तथा यसका एक सय नौ आयत तथा एघारह रूकुअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु तथा अत्यन्त दयालु छ ।

الٓرۚ تِلْكَ آيَاتُ الْكِتَابِ الْحَكِيمِ ﴿١﴾

(१) अलिफ. लाम. रा. । यो तत्वज्ञानले भरिएको किताबका आयतहरु हुन् ।[3]

أَكَانَ لِلنَّاسِ عَجَبًا أَنْ أَوْحَيْنَا

(२) के उनीहरुलाई यस कुराबाट आश्चर्य भयो[4] कि हामीले उनीहरु मध्येबाट एउटा व्यक्तिको पासमा

---

[1]आदरणीय अबू दरदा भन्नुहुन्छ कि जुन व्यक्ति यो आयत (حسبي الله) प्रातः तथा सयंकाल सात-सात पटक पढ्नेछ, अल्लाह तआ़ला त्यसका चिन्ताहरु (चिन्ता तथा कठिनाई) को लागि पर्याप्त हुनेछ । (सुनन अबू दाऊद संख्या-५०८१)

[2]सूरः यूनुस मक्की हो, परन्तु यसका दुई आयत तथा केही ज्ञाताले तीन आयतहरुलाई मदनी भनेका छन् । (फ़तहुल क़दीर)

[3](الحكيم) किताब अर्थात् कुर्आन मजीदको विशेषण हो । यसको एउटा त त्यही अर्थ हो जुन अनुवादमा प्रयोग गरिएको छ । यसका अन्य पनि कैयन् अर्थ गरिएका छन् । जस्तो (المحكم) अर्थात् हलाल तथा हराम एवं नियम तथा आदेशमा दृढ छ । (حكيم) को अर्थ (حاكم) (अधिकारी) सित, अर्थात् मतभेदमा मानिसहरुका बीच निर्णय गर्ने किताब (सूरः अल-बकरः-२३) ( حكيم ) को अर्थ (محكوم فيه) अर्थात् अल्लाह तआ़लाले यसमा न्यायका साथ निर्णय गरेको छ ।

[4]प्रश्न आश्चर्यलाई नकार्नको लागि छ, जसमा निन्दाको भाव पनि सम्मिलित छ । अर्थात यस कुरामा आश्चर्य हुनुहुँदैन कि अल्लाह तआ़लाले मनुष्यहरुबाट नै एक व्यक्तिलाई आदेश (प्रकाशना) तथा रिसालतको लागि रोज्यो, किनभने उनी आफ्नो सहजाति हुनुका कारण त्यो उचित अर्थहरुमा उनको मार्गदर्शन गर्न सक्दछ । यदि त्यो कुनै अन्य जाति मध्येबाट भएको भए फरिश्ता अथवा जिन्न हुन्थ्यो तथा दुबै परिस्थितिहरुमा रिसालत (सन्देश पुऱ्याउने) को मूल उद्देश्य समाप्त हुने थियो । यसकारण कि मानिस उससित सम्बन्ध राख्नुको सट्टा भयका

إِلَىٰ رَجُلٍ مِّنْهُمْ أَنْ أَنذِرِ النَّاسَ وَبَشِّرِ الَّذِينَ آمَنُوا أَنَّ لَهُمْ قَدَمَ صِدْقٍ عِندَ رَبِّهِمْ ۗ قَالَ الْكَافِرُونَ إِنَّ هَٰذَا لَسَاحِرٌ مُّبِينٌ ﴿٢﴾

वह्यी (प्रकाशना) पठायौं कि सबै मानव गणलाई सचेत गरिदेउ तथा जसले ईमान स्थापित गरे, उनलाई यो शुभ-सूचना सुनाइदिनुस् कि उनको प्रभुको पासमा उनलाई पूरा प्रतिफल एवं सम्मान प्राप्त हुनेछ[1] । काफिरहरुले भने यो व्यक्ति नि:सन्देह स्पष्ट जादूगर (तान्त्रिक) हो ।[2]

إِنَّ رَبَّكُمُ اللَّهُ الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ فِي سِتَّةِ أَيَّامٍ ثُمَّ اسْتَوَىٰ عَلَى الْعَرْشِ ۖ يُدَبِّرُ الْأَمْرَ ۖ مَا مِن شَفِيعٍ إِلَّا مِن بَعْدِ إِذْنِهِ ۚ ذَٰلِكُمُ اللَّهُ رَبُّكُمْ فَاعْبُدُوهُ ۚ

(३). नि:सन्देह तिम्रो पोषक नै हो जसले छ: दिनमा आकाशहरु तथा धर्तीलाई सृष्टि गऱ्यो अनि अर्शमा स्थिर भयो ।[3] त्यो प्रत्येक कामको प्रयोजन गर्दछ ।[4] उसको आज्ञा बिना उसको निकट कोही सिफारिश गर्न सक्दैन,[5] यस्तो अल्लाह तिम्रा

आभास गर्दथे । दोस्रो यिनका लागि उसलाई देख्नु पनि सम्भव हुँदैनथ्यो । तथा यदि हामीले कुनै जिन्न अथवा फरिश्तालाई मनुष्यको शरीरमा पठाइदिएको भए त त्यही आरोप हुन्थ्यो कि यो त हामी जस्तै मनुष्य हो । यसकारण यिनका यस आश्चर्यमा कुनै सार्थकता छैन ।

[1]﴾قَدَمَ صِدْقٍ﴿ को अर्थ उच्च पद, राम्रो प्रतिफल तथा पुण्यको कार्य हो, जुन एउटा ईमान हुनेले अगाडी पठाउँछ ।

[2]काफिरहरुलाई जब नकार्नको निम्ति कुनै अन्य कुरा बुद्धिमा आउदैनथ्यो त यो भनेर भागिहाल्थे कि यो त जादूगर हो । (نعوذ بالله)

[3]यसको व्याख्याको लागि हेर्नुस् सूर: अल-आराफ आयत संख्या ५४ को व्याख्या ।

[4]अर्थात आकाश तथा धर्तीको सृष्टि गरी उसले त्यसलाई त्यसै छाडिदिएन, बरु सारा सृष्टिको नियन्त्रण एवं सञ्चालन यसप्रकार गरिराखेको छ कि कहिले कसैको आपसमा टकराव भएन, प्रत्येक वस्तु उसको निर्देशानुसार आ-आफ्नो काममा ब्यस्त छ ।

[5]मूर्तिपूजक तथा काफिर जुन मूलरूपमा सम्बोधित थिए, उनको विश्वास थियो कि यी मूर्तिहरु जसको उनीहरु पूजा गर्दथे, अल्लाहका समक्ष उनको सिफारिश गर्नेछन् तथा उनलाई अल्लाहको यातनाबाट मुक्त गराइदिने छन् । अल्लाह तआलाले आदेश गऱ्यो, त्यहाँ अल्लाहको आज्ञा बिना कसैलाई सिफारिश गर्नुको अनुमति हुनेछैन, तथा यो आज्ञा पनि उनीहरुका लागि हुनेछ

أَفَلَا تَذَكَّرُونَ ③

स्वामी छ, त तिमी उसको पूजा गर ।[1] के तिमी तैपनि शिक्षा ग्रहण गर्दैनौ ।

إِلَيْهِ مَرْجِعُكُمْ جَمِيعًا وَعْدَ اللَّهِ حَقًّا إِنَّهُ يَبْدَأُ الْخَلْقَ ثُمَّ يُعِيدُهُ لِيَجْزِيَ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ بِالْقِسْطِ وَالَّذِينَ كَفَرُوا لَهُمْ شَرَابٌ مِنْ حَمِيمٍ وَعَذَابٌ أَلِيمٌ بِمَا كَانُوا يَكْفُرُونَ ④

(४) तिमी सबैलाई अल्लाहकै पासमा जानुछ, अल्लाहले साँचो वाचा गरेको छ । निःसन्देह त्यही प्रथम पटक सृष्टि गर्दछ अनि त्यही पुनः सृष्टि गर्नेछ ताकि यस्ता व्यक्तिहरुलाई जसले ईमान स्थापित गरे तथा पुण्यका काम गरे, उनीहरूलाई न्यायका साथ प्रतिफल देओस् तथा जुन व्यक्तिहरुले कुफ्र गरे उनको लागि उम्लिराखेको पानी पिउनका लागि दिइनेछ तथा उनका कुफ्रका कारण कष्टदायी यातना हुनेछ ।[2]

هُوَ الَّذِي جَعَلَ الشَّمْسَ ضِيَاءً وَالْقَمَرَ نُورًا وَقَدَّرَهُ مَنَازِلَ

(५) त्यो (अल्लाह तआला) यस्तो छ जसले सूर्यलाई प्रकाशमान बनायो तथा चन्द्रमालाई ज्योतिर्मय बनायो ।[3] तथा त्यसको लागि स्थान

जसलाई अल्लाह तआला प्रिय ठान्नेछ । (﴿وَلَا يَشْفَعُونَ إِلَّا لِمَنِ ارْتَضَى﴾) (सूरः अल-अम्बिया-२८) (لا تغنى شفاعتهم شيئا إلا من بعد أن يأذن الله لمن يشاء و يرضى) (सूरः अल-नज्म-२६)

[1]अर्थात् यस्तो अल्लाह जो सृष्टिको स्रष्टा पनि छ तथा त्यसको नियोजक तथा सञ्चालक पनि, त्यसको अतिरिक्त सबै अधिकारहरुको पूर्ण मालिक छ, त्यही यस योग्य छ कि उसको इबादत (आराधना) गरियोस् ।

[2]यस आयतमा प्रलयको आगमन, अल्लाहका समक्ष सबै एकत्रित हुने, प्रतिफल तथा सजायको वर्णन छ । यो विषय कुर्आन करीममा विभिन्न शैलीमा विभिन्न स्थानमा वर्णन भएको छ ।

[3](ضياء) को समार्थी (ضوء) छ । सबंध्य यहाँ लोप छ । (ذات ضياء و القمر ذانور) सूर्यलाई चम्किने तथा चन्द्रमालाई प्रकाश भएको बनायो । अथवा उनलाई अतिश्योक्तिमा आधारित गरियोस् जस्तो कि यी स्वयं प्रकाश एवं कान्ति हुन् । आकाश तथा धर्तीको सृष्टि तथा उनी नियोजित हुनुको वर्णन पश्चात उदाहरण स्वरूप केही अन्य वस्तुहरुको वर्णन गरिंदैछ, जसको सम्बन्ध सृष्टि उनी नियोजनसित छ, जसमा सूर्य तथा चन्द्रमाको महत्वपूर्ण स्थान छ । सूर्यको गर्मी, ताप तथा त्यसको प्रकाश कति आवश्यक छ,

لِتَعْلَمُوا عَدَدَ السِّنِينَ وَالْحِسَابَ ۚ مَا خَلَقَ اللَّهُ ذَٰلِكَ إِلَّا بِالْحَقِّ ۚ يُفَصِّلُ الْآيَاتِ لِقَوْمٍ يَعْلَمُونَ ۝

(गन्तब्य) निर्धारित गऱ्यो ताकि तिमी वर्षहरुको गणना गर्न सक तथा गणना (हिसाब) लाई जान ।[1] अल्लाह तआलाले यी सबै कुरा ब्यर्थ मा सृष्टि गरेन । त्यसले यो प्रमाण उनीहरुलाई स्पष्ट भनिराखेको छ जो बुद्धि भएका छन् ।

إِنَّ فِي اخْتِلَافِ اللَّيْلِ وَالنَّهَارِ وَمَا خَلَقَ اللَّهُ فِي السَّمَاوَاتِ وَالْأَرْضِ لَآيَاتٍ لِقَوْمٍ يَتَّقُونَ ۝

(६) निःसन्देह रात-दिनका एक-अर्काको पछाडी आउनमा तथा अल्लाह तआलाले आकाश तथा धर्तीमा जे-जति पैदा गरेको छ, ती सबैमा उनीहरुका लागि प्रमाण छन् जो अल्लाहसित तर्सन्छन् ।

आवश्यक छ, त्यसलाई हरेक बुद्धि भएको व्यक्ति जान्दछ । यसैप्रकार चन्द्रमाको प्रकाशबाट जुन आनन्द तथा लाभ छ, त्यसलाई वर्णन गर्नुको आवश्यकता छैन । वैज्ञानिकहरुको विचार छ कि सूर्यको प्रकाश स्वयं उसको हो तथा चन्द्रमाको प्रकाश अरुबाट हो, अर्थात सूर्यबाट प्राप्त छ । (फ़तहुल क़दीर)

[1]अर्थात् हामीले चन्द्रमाको गन्तव्य निर्धारित गरिदिएका छौं । यी स्थानहरुबाट तात्पर्य त्यो दूरी हो जुन त्यो एक रात तथा एक दिनमा आफ्नो निर्धारित गतिका साथ पूरा गर्दछ । यी २८ गन्तव्य छन् । प्रत्येक रात एउटा स्थानमा पुग्दछ, जसमा कुनै त्रुटि हुँदैन । पहिलो अवस्थामा त्यो क्षीण तथा पातलो देखिन्छ, अनि निरन्तर ठूलो हुँदैजान्छ, यहाँसम्मकि चौधौं रात्रि अथवा चौधौं अवस्थामा पूर्ण चन्द्रमा हुन्छ । यसको पश्चात पुनः त्यो खुम्चन थाल्छ तथा पातलो हुन्छ । यहाँसम्मकि अन्त्यमा एउटा अथवा दुई रात्रि गुप्त रहन्छ । तथा पुनः सोम बनेर उदित हुन्छ । यसको यो लाभ भनिएको छ ताकि तिमी वर्षहरुको गणना तथा हिसाब जान्न सक । अर्थात् चन्द्रमाका यी स्थितिहरु तथा हिसाब गर्नमा सुविधा हुन्छ । अर्थात् वर्ष बन्दछन्, जसबाट तिमीलाई हरेक कुरोको हिसाब गर्नमा सुविधा हुन्छ । अर्थात् वर्ष बाह्र महिनाको तथा महीना २९ अथवा ३० दिनको । एक दिन चौबीस घण्टा अर्थात् रात्रि र दिनको जुन बराबर दिन रातमा बाह्र-बाह्र घण्टा तथा जाडो र गर्मीमा क्षीण तथा ठूला हुन्छन् । यसका अतिरिक्त सांसारिक लाभ तथा व्यापार नै यी अवस्थाहरुसित सम्बन्धित छैनन् । धार्मिक लाभ पनि यसबाट प्राप्त हुन्छन् । यसै चन्द्रोदयबाट हज़, रमज़ानका ब्रतहरु, सम्मानित महिना तथा अन्य इबादतहरु (उपासना) को निर्धारण हुन्छ, जसको प्रायोजन मोमिनले गर्दछ ।

(७) जुन मानिसहरुलाई हाम्रो पासमा आउने कुराको विश्वास छैन, तथा उनी सांसारिक जीवनमा प्रसन्न भएका छन् तथा त्यसमा मन लगाएर बसेछन् तथा जुन मानिसहरु हाम्रा आयतहरुबाट विमुख छन् ।

إِنَّ الَّذِينَ لَا يَرْجُونَ لِقَاءَنَا وَرَضُوا بِالْحَيَاةِ الدُّنْيَا وَاطْمَأَنُّوا بِهَا وَالَّذِينَ هُمْ عَنْ آيَاتِنَا غَافِلُونَ ۝٧

(८) यस्ता मानिसहरुको ठेगाना (स्थान), उनका कर्महरुका कारण, नरक छ ।

أُولَٰئِكَ مَأْوَاهُمُ النَّارُ بِمَا كَانُوا يَكْسِبُونَ ۝٨

(९) निःसन्देह जुन मानिसहरुले ईमान स्थापित तथा पुण्य कार्य गरे उनको पालनकर्ताले उनलाई निष्ठावान भएका कारण (उनको लक्ष्यसम्म) पुऱ्याइदिनेछ,[1] सुखका बगैंचाहरुमा जसमा नहरहरु बगिराखेका हुनेछन् ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ يَهْدِيهِمْ رَبُّهُمْ بِإِيمَانِهِمْ تَجْرِي مِنْ تَحْتِهِمُ الْأَنْهَارُ فِي جَنَّاتِ النَّعِيمِ ۝٩

(१०) त्यहाँ उनीहरूका मुखवाट यो कुरा निस्कने छ "सुब्हानल्लाह"[2] तथा उनको आपसी सलाम (अभिवादन) यो हुनेछ "अस्सलामु अलैकुम"[3]

دَعْوَاهُمْ فِيهَا سُبْحَانَكَ اللَّهُمَّ وَتَحِيَّتُهُمْ فِيهَا سَلَامٌ ۚ وَآخِرُ

[1]यसको एउटा अन्य अनुवाद यो गरिएको छ कि संसारमा ईमानका कारण प्रलयका दिन अल्लाह तआला उनको लागि पुल सिरातबाट गुज्रन (तर्न) सरल गरिदिनेछ, केही जानकारहरूका निकट यो अल्लाह तआलाबाट सहायता प्राप्त गर्नको लागि छ तथा अनुवाद यो हुनेछ कि अल्लाह तआला प्रलयका दिन उनका निम्ति एउटा दिव्य ज्योति उपलब्ध गर्नेछ जसको प्रकाशमा उनीहरु हिंड्नेछन् जस्तो कि सूरः हदीदमा यस वारे वर्णन छ ।

[2]अर्थात स्वर्गमा जानेहरू प्रत्येक क्षण अल्लाहको महिमा तथा प्रशंसामा लीन हुनेछन् । जस्तो हदीसमा वर्णित छ : "स्वर्गका निवासीहरुका मुखबाट अल्लाहको महिमा तथा प्रशंसा यसप्रकार निस्कने छ, जुनप्रकार साँस निस्कन्छ ।" (सहीह मुस्लिम किताबुल जन्नः व सिफ़ति नईमेहा, बाबुन फ़ी सिफ़ातिल जन्नः व अहलेहा व तस्बीहेहिम फ़ीहा बुकरतन व अशीया) अर्थात जुनप्रकार निरन्तर श्वास भित्र आउँछ तथा बाहिर गईरहन्छ, यसैप्रकार स्वर्गवासीका मुखमा बिना कुनै प्रयोजन अल्लाहका महिमा तथा प्रशंसाका गुणगान रहनेछन् ।

[3]अर्थात एक-अर्कालाई यसप्रकार सलाम गर्नेछन्, यसैप्रकार फरिश्ताहरुले पनि उनलाई सलाम गर्नेछन् ।

دَعْوٰىهُمْ اَنِ الْحَمْدُ لِلّٰهِ رَبِّ الْعٰلَمِيْنَ ⑩

तथा उनीहरूको अन्तिम कुरा यो हुनेछ कि सम्पूर्ण प्रशंसाहरु अल्लाहकै लागि हुन्, जो सम्पूर्ण जगतको पालनकर्ता हो ।

وَلَوْ يُعَجِّلُ اللّٰهُ لِلنَّاسِ الشَّرَّ اسْتِعْجَالَهُمْ بِالْخَيْرِ لَقُضِيَ اِلَيْهِمْ اَجَلُهُمْ ۭ فَنَذَرُ الَّذِيْنَ لَا يَرْجُوْنَ لِقَاۗءَنَا فِيْ طُغْيَانِهِمْ يَعْمَهُوْنَ ⑪

(११) तथा यदि अल्लाहले मानिसहरुलाई तुरुन्त हानि पुऱ्याइदिएको भए जस्तो कि मानिसहरु तुरुन्त लाभ चाहन्छन्, त उनको वचन अघिनै पूरा भइसकेको हुन्थ्यो ।[1] तसर्थ हामी ती मानिसहरुलाई जसलाई हाम्रो पासमा आउने कुराको विश्वास छैन, तिनका अवस्थामा छाडिदिन्छौ ताकि उनीहरु आफ्नो उद्दण्डतामा भौंतारिरहून् ।

وَاِذَا مَسَّ الْاِنْسَانَ الضُّرُّ دَعَانَا لِجَنْۢبِهٖٓ اَوْ قَاعِدًا اَوْ قَاۗىِٕمًا ۚ فَلَمَّا

(१२) तथा जब मनुष्यलाई कुनै कष्ट पुग्दछ, त हामीलाई पुकार्दछ । पल्टेको भएपनि, बसेको अवस्थामा पनि, उभे पनि । अनि जब हामी त्यसको कष्ट

[1]यसको एउटा अर्थ यो हो कि जुनप्रकार मनुष्य पुण्यलाई प्राप्त गर्नमा शीघ्रता गर्दछ, त्यसैप्रकार अशुभ (यातना) लाई प्राप्त गर्नमा पनि शीघ्रता गर्दछ, अल्लाहका पैगम्वरहरु (ईशदूत) सित भन्दछ यदि तिमी साँचो हौ भने त्यो यातना लिएर आउ जसवाट तिमी तर्साउँछौ । अल्लाह तआला भन्दछ कि यदि उनको यस मागका अनुसार हामीले शीघ्र यातना पठाइदिएको भए त धेरै अघि यिनीहरु मृत्यु तथा विनाशको स्वाद चाखिसकेका हुन्थे तर हामी उनलाई समय दिएर पूर्ण अवसर प्रदान गर्दछौं । दोस्रो अर्थ यो हो कि जुनप्रकार मनुष्य आफ्नो लागि पुण्य तथा भलाईका लागि प्रार्थनाहरु गर्दछ, जसलाई हामी स्वीकार गर्दछौं । यसैप्रकार जब मनुष्य क्रोध अथवा कष्टमा हुन्छ, त आफ्नो लागि तथा आफ्नो सन्तान आदिको लागि शापको प्रार्थना गर्दछ, जसलाई हामी यसकारण वास्ता गर्दैनौं कि यो मुखले विनाश माँगिर खेको छ, तर हृदयमा उसको यस्तो विचार छैन तर पछि हामी मनुष्यको शापका मागका अनुसार उनलाई तुरुन्त विनाशमा पारिदेऔं भने, शीघ्र नै यिनीहरु मृत्युको स्वाद चाख्छन्, यसकारण हदीसमा वर्णन छ: "तिमी आफ्नो सन्तानका लागि तथा आफ्ना माल व्यापारका लागि अपशब्द ननिकाल्ने गर, कहीं यस्तो नहोस् कि तिम्रा अपशब्द त्यस क्षणलाई प्राप्त गरिहालून्, जसबेला अल्लाहको तर्फबाट प्रार्थनाहरु स्वीकार गरिन्छन्, अत: त्यसले तिम्रा अपशब्दलाई स्वीकार गरोस् ।" (सुनन अबी दाऊद किताबुल वित्र, बाबुन नहये अन यदअऊल इन्सान अला अहलेही व मालेही, तथा मुस्लिम किताबुल जुहद, फी हदीस जाबिर अत-तवील)

كَشَفۡنَا عَنۡهُ ضُرَّهُۥ مَرَّ كَأَن لَّمۡ يَدۡعُنَآ إِلَىٰ ضُرّٖ مَّسَّهُۥۚ كَذَٰلِكَ زُيِّنَ لِلۡمُسۡرِفِينَ مَا كَانُواْ يَعۡمَلُونَ ⑫

निवारण गरिदिन्छौ, त त्यो यस्तो हुन्छ कि मानौ उसले आफ्नो कष्टका लागि जुन उसलाई पुगेको थियो, कहिल्यै हामीलाई पुकारेकै थिएन ।[1] यी सीमा उल्लघंन गर्नेहरुको कर्मलाई उनको लागि उसैप्रकार प्रिय प्रतीत हुने बनाइदिइको छ ।[2]

وَلَقَدۡ أَهۡلَكۡنَا ٱلۡقُرُونَ مِن قَبۡلِكُمۡ لَمَّا ظَلَمُواْ وَجَآءَتۡهُمۡ رُسُلُهُم بِٱلۡبَيِّنَٰتِ وَمَا كَانُواْ لِيُؤۡمِنُواْۚ كَذَٰلِكَ نَجۡزِي ٱلۡقَوۡمَ ٱلۡمُجۡرِمِينَ ⑬

(१३) तथा हामीले तिमीभन्दा पूर्व यस्ता धेरै गिरोहहरुलाई नष्ट गरिदियौं, जब उनीहरुले अत्याचार गरे, यद्यपि उनको पासमा उनका पैग़म्बर पनि निशानीहरु लिएर आए तर तिनीहरु यस्ता थिएनन् कि ईमान ल्याउँथे ? हामी

[1]यो मनुष्यको त्यस अवस्थाको वर्णन हो, जुन मनुष्यको बहुमतका क्रियाकलाप हो । वरु धेरैजसो अल्लाहलाई मान्नेहरू पनि यस आलस्यको कार्य सामान्य रूपले गर्दछन् कि दुखका समय अत्याधिक अल्लाह-अल्लाह भइरहेको छ, प्रार्थनाहरु गरिदैछन्, तौवा तथा क्षमा-याचनाको प्रयोजन भइरहेको छ । परन्तु जब अल्लाह तआ़ला दुखको त्यो कठोर समय समाप्त गरिदिन्छ, त पछि अल्लाहको दरबारमा विनय एवं प्रार्थनाबाट पनि अन्जान हुन खोज्दछन् तथा अल्लाहले उनका प्रार्थनाहरुलाई स्वीकार गरी जुन कठिनाईहरुबाट स्वतन्त्रता दिलायो त्यसमा अल्लाहप्रति कृतज्ञता व्यक्त गर्नुको पनि सौभाग्य उनलाई हुँदैन ।

[2]यो कर्महरुको शोभा, परीक्षा एवं अवसरको अनुरुप अल्लाहको तर्फबाट पनि हुनसक्छ, शंकाहरुद्वारा शैतानको तर्फबाट पनि हुनसक्दछ तथा मनुष्यको त्यस इन्द्रियको तर्फबाट पनि हुनसक्छ, जुन मनुष्यलाई नराम्रो कामको लागि तैयार गर्दछ ।

﴿إِنَّ ٱلنَّفۡسَ لَأَمَّارَةُۢ بِٱلسُّوٓءِ﴾ (सूर: यूसुफ-५३) तैपनि यसका शिकार ती नै हुन्छन् जो सीमा उल्लघंन गर्दछन् । यहाँ अर्थ यो भयो कि उनका लागि प्रार्थनाबाट विमुख हुनु, अल्लाहप्रति कृतज्ञता व्यक्त गर्नुमा आलस्य तथा इच्छा तथा इन्द्रियहरुका साथ कर्म सुशोभित गरिदिइएको छ । (फ़तहुल क़दीर)

अपराधीहरुलाई यस्तै प्रकारका दण्ड गर्दछौं।[1]

(१४) अनि उनका पश्चात हामीले संसारमा उनको स्थानमा तिमीलाई बसायौं,[2] ताकि हामीले हेरौं तिमी कस्तो कर्म गर्दछौ ?

ثُمَّ جَعَلْنَٰكُمْ خَلَٰٓئِفَ فِى ٱلْأَرْضِ مِنۢ بَعْدِهِمْ لِنَنظُرَ كَيْفَ تَعْمَلُونَ ⑭

(१५) तथा जब उनका समक्ष हाम्रा आयतहरु पढिन्छन्[3] जुन बिल्कुल स्पष्ट छन्, त यी मानिसहरु जसलाई हाम्रो पासमा आउने कुरोको विश्वास छैन, यस्तो भन्दछन् कि यसको अतिरिक्त अन्य कुर्आन ल्याउनुस[4] अथवा यसमा केही परिवर्तन गरिदिनुस, (तपाईं सल्लल्लाहु अलैहि वसल्लम) यो भनिदिनुस् कि मलाई यो अधिकार छैन कि आफ्नो तर्फबाट त्यसमा परिवर्तन गरू,[5] म त त्यसैको पालना गर्नेछु जुन मेरो पासमा वह्यी (प्रकाशना) द्वारा आएको छ। यदि म आफ्नो प्रभुको

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ ءَايَاتُنَا بَيِّنَٰتٍ ۙ قَالَ ٱلَّذِينَ لَا يَرْجُونَ لِقَآءَنَا ٱئْتِ بِقُرْءَانٍ غَيْرِ هَٰذَآ أَوْ بَدِّلْهُ ۚ قُلْ مَا يَكُونُ لِىٓ أَنْ أُبَدِّلَهُۥ مِن تِلْقَآئِ نَفْسِىٓ ۖ إِنْ أَتَّبِعُ إِلَّا مَا يُوحَىٰٓ إِلَىَّ ۖ إِنِّىٓ أَخَافُ إِنْ عَصَيْتُ رَبِّى عَذَابَ يَوْمٍ عَظِيمٍ ⑮

[1] यो मक्काका काफिरहरुलाई चेतावनी हो कि पूर्वका समुदायहरु जस्तै तिमीले पनि विनाशको सामना गर्नुपर्ने हुनसक्छ।

[2] (خلائف) वहुवचन हो (خليفة) को। यसको अर्थ हो, जुन विगत समुदायहरुको स्थान लिन्छ अथवा एउटा समुदाय जुन अर्काको स्थान लिन्छ।

[3] अर्थात् जुन अल्लाह पूज्य तथा एक हुनुको प्रमाण हो।

[4] अर्थ यो हो कि या त यस पवित्र कुर्आनको स्थानमा अर्को ल्याउनुस् अथवा यसमा हाम्रो इच्छा अनुसार परिवर्तन गर्नुस्।

[5] अर्थात् मबाट दुबै कुरा सम्भव छैन, किनभने मलाई यसमा कुनै प्रकारको परिवर्तनको पनि शक्ति छैन।

अवज्ञा गरें भने म एउटा ठूलो दिनको यातनाबाट तर्सन्छु ।[1]

قُلْ لَّوْ شَآءَ اللّٰهُ مَا تَلَوْتُهٗ عَلَيْكُمْ وَلَآ اَدْرٰىكُمْ بِهٖ ۖ فَقَدْ لَبِثْتُ فِيْكُمْ عُمُرًا مِّنْ قَبْلِهٖ ؕ اَفَلَا تَعْقِلُوْنَ ﴿۱۶﴾

(१६) (तपाईं) भनिदिनुस् कि यदि अल्लाहले चाहेको भए न त म तिमीलाई त्यो पढेर सुनाउँथें तथा न अल्लाह (तआला) तिमीलाई त्यसको सूचना दिन्थ्यौ,[2] किनभने यसभन्दा पूर्व त म एक दीर्घ आयुसम्म तिमी बीच रहिसकेको छु । अनि के तिमी बुझ्दैनौ ?[3]

فَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا اَوْ كَذَّبَ بِاٰيٰتِهٖ ؕ اِنَّهٗ لَا يُفْلِحُ الْمُجْرِمُوْنَ ﴿۱۷﴾

(१७) तसर्थ त्यसभन्दा अधिक अत्याचारी को होला जो अल्लाहमाथि मिथ्यारोपण गर्दछ अथवा उसका आयतहरुलाई झूठो भन्दछ, निश्चय यस्ता अपराधी कहिले सफल हुने छैनन् ।

وَيَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ

(१८) तथा यी मानिसहरु अल्लाहलाई छोडे[4] यस्ता कुराको पूजा गर्दछन् जुन उनलाइ



[1]यहाँ त्यसमाथि अधिक जोड दिइएको छ । म त मात्र उसैको अनुयायी हूँ जुन अल्लाहको तर्फबाट ममाथि अवतरित गरिएको छ । यसमा कुनै प्रकारको कमी अथवा वृद्धि म गर्दछु भने त्यस महान दिनको यातनाबाट म सुरक्षित रहन सक्दिन ।

[2]अर्थात् सम्पूर्ण कुरा अल्लाहको इच्छामा आधारित छ, त्यसले चाहेको भए म पढेर सुनाउँथें, न तिमीलाई यसको कुनै सूचना हुन्थ्यो । केही ज्ञाताहरूले यसको अर्थ यो गरेका छन् कि मेरो मुखबाट तिमीलाई यस कुर्आनको विषयमा केही भन्दैनथ्यो ।

[3]तथा तिमी पनि जान्दछौ कि नबूवतको घोषणाभन्दा पूर्व तिमीहरुसँग ४० वर्ष मैले व्यतीत गरेको छु । के मैले कुनै गुरुबाट केही सिके ? यसैप्रकार तिमी मेरो साँचो हुने कुरो तथा माललाई सुरक्षित राख्ने मानिस ठान्दै आएका छौ । के यो सम्भव छ कि म अल्लाहबारे झूठा कुरा भन्न प्रारम्भ गरुँ ? यो दुबै कुराको यो अर्थ हो कि यो कुर्आन अल्लाहबाट नै अवतरित गरिएको हो, न मैले कसैबाट सुनें अथवा सिकेर यसलाई वर्णन गरेको छु तथा न यसै झूठ यसलाई अल्लाहसित सम्बन्धित गरेको छु ।

[4]अर्थात् अल्लाहको उपासनाको सीमा उल्लघंन गरी न कि अल्लाहको इबादतलाई त्यागेर । किनभने मूर्तिपूजक अल्लाहको पनि इबादत गर्दथे तथा अन्यको पनि ।

مَا لَا يَضُرُّهُمْ وَلَا يَنفَعُهُمْ وَيَقُولُونَ هَٰٓؤُلَآءِ شُفَعَٰٓؤُنَا عِندَ ٱللَّهِ ۚ قُلْ أَتُنَبِّـُٔونَ ٱللَّهَ بِمَا لَا يَعْلَمُ فِى ٱلسَّمَٰوَٰتِ وَلَا فِى ٱلْأَرْضِ ۚ سُبْحَٰنَهُۥ وَتَعَٰلَىٰ عَمَّا يُشْرِكُونَ ﴿١٨﴾

न हानि पुऱ्याउन सक्दछन् तथा न उनलाई लाभ पुऱ्याउन सक्दछन् ।[१] तथा भन्दछन् कि यिनी अल्लाहका समक्ष हाम्रा सिफारिश गर्नेहरू हुन् ।[२] (तपाईं) भनिदिनुस् कि के तिमी अल्लाहलाई यस्तो विषयको सूचना दिन्छौ, जसलाई त्यो जान्दैन, आकाशहरु तथा धर्तीमा ।[३] त्यो महिमावान छ र त्यसको उच्चताको प्रतिकूल छ त्यो शिर्क (अनेकेश्वरवाद) जुन उनीहरू गरिरहेछन् ।[४]

وَمَا كَانَ ٱلنَّاسُ إِلَّآ أُمَّةً وَٰحِدَةً فَٱخْتَلَفُوا۟ ۚ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ

(१९) तथा सबै मानिसहरु एउटै उम्मत (समुदाय-धर्म) का थिए, अनि उनीहरुले मतभेद उत्पन्न गरे ।[५] तथा यदि एउटा कुरा नभएको भए, जुन तपाईंको प्रभुको

[१]जबकि पूजनीयको गरिमा यो हुन्छ कि त्यो आफ्ना आज्ञाकारीहरुलाई प्रतिफल तथा अवज्ञाकारीहरुलाई दण्ड दिनमा समर्थ होस् ।

[२]अर्थात् उनको सिफारिशले अल्लाह हाम्रा आवश्यकताहरुलाई पूरा गरिदिन्छ । हाम्रा विग्रेका कुरालाई बनाइदिन्छ अथवा हाम्रा शत्रुको बनेका कुरालाई विगारिदिन्छ । अर्थात् मूर्तिपूजक पनि अल्लाहका अतिरिक्त जसको पूजा गर्दथे उनलाई लाभ हानिमा पूर्णरुपले निश्चित ठान्दैनथे । बरु आफ्नो तथा अल्लाहका बीच माध्यम तथा सिफारिश गर्नेहरू ठान्दथे ।

[३]अर्थात् अल्लाहलाई त यस कुराको ज्ञान छैन कि उसको कोही साझेदार पनि छ अथवा उसको दरबारमा सिफारिश गर्नेहरू पनि हुनेछन् ? यसप्रकार यी मूर्तिपूजक अल्लाहलाई सूचना दिन्छन् कि तिमीलाई यद्यपि सूचना छैन, परन्तु हामी तिमीलाई भन्दछौं कि तिम्रा साझेदार पनि छन् र सिफारिश गर्नेहरू पनि छन्, जो आफ्ना श्रद्धालुहरुको सिफारिस गर्नेछन् ।

[४]अल्लाह तआलाले भन्नुभयो कि मूर्तिपूजकहरुको यो कुरो निराधार छ, अल्लाह तआला यी सबै कुराहरुबाट पवित्र छ ।

[५]अर्थात् यो शिर्क (अनेकेश्वरवाद) मानिसहरुको आफ्नो उपज हो अन्यथा पहिला यसको कुनै अस्तित्व थिएन । सबै मानिसहरु एउटै धर्म तथा एउटा मार्गमा थिए, जुन इस्लाम हो जसमा एकेश्वरवादलाई मूल स्थान प्राप्त छ । आदरणीय नूहसम्म यसै मार्ग, एकेश्वरवादमा हिंडिरहे । अनि उनीहरुमा मतभेद भयो तथा केही मानिसहरुले अल्लाहसित अन्यलाई पनि देवता, चिन्ताकारक तथा कष्टनिवारक ठान्न प्रारम्भ गर ।

مِنْ رَّبِّكَ لَقُضِيَ بَيْنَهُمْ فِيْمَا فِيْهِ يَخْتَلِفُوْنَ ⑲

तर्फबाट निर्धारित गरिसकिएको छ, त जुन कुरामा यिनीहरु मतभेद गरिराखेका छन्, तिनको पूर्णरुपमा निर्णय भइसकेको हुन्थ्यो ।[1]

وَيَقُوْلُوْنَ لَوْلَآ اُنْزِلَ عَلَيْهِ اٰيَةٌ مِّنْ رَّبِّهٖ ۚ فَقُلْ اِنَّمَا الْغَيْبُ لِلّٰهِ فَانْتَظِرُوْا ۚ اِنِّيْ مَعَكُمْ مِّنَ الْمُنْتَظِرِيْنَ ⑳

(२०) तथा यिनीहरु यो भन्दछन् कि उनीहरूमाथि कुनै चमत्कार किन अवतरित भएन ?[2] (तसर्थ तपाईं) भनिदिनुस् कि परोक्षको ज्ञान मात्र अल्लाहलाई छ,[3] त तिमी पनि प्रतिक्षामा रह म पनि तिमीसित प्रतीक्षामा छु ।

وَاِذَآ اَذَقْنَا النَّاسَ رَحْمَةً مِّنْۢ بَعْدِ ضَرَّآءَ مَسَّتْهُمْ اِذَا لَهُمْ مَّكْرٌ

(२१) तथा जब हामी मानिसहरुलाई दुख पुऱ्याए पश्चात सुखको स्वाद चखाउँछौं,[4] त उनीहरूले तुरुन्त हाम्रा आयतहरुका विषयमा धूर्तता गर्न

[1]अर्थात् यदि अल्लाहको निर्णय यो नभएको भए कि सवै कुरा भन्नुभन्दा पूर्व कसैलाई यातना दिनु छैन, त्यसैप्रकार उसले सृष्टिका लागि पनि एक निर्धारित समयको निर्धारण नगरेको भए त निःसन्देह उनका वीच मतभेदको निर्णय तथा ईमान भएकाहरुलाई आज्ञाकारी तथा काफ़िरहरुलाई यातना तथा कष्टमा लिप्त गरिसकेको हुन्थ्यो ।

[2]यसबाट तात्पर्य कुनै ठूलो खुल्ला चमत्कार हो । जस्तै समूदको समुदायका लागि उँटनीको प्रकट हुनु । उनका लागि सफ़ पर्वतलाई स्वर्णको अथवा मक्काका पर्वतहरुलाई समाप्त गरी उनका ठाउँमा नहरहरु तथा बगैंचा बनाउनुको अथवा अन्य यसप्रकारको कुनै चमत्कार प्रकट गरी देखाइयोस् ।

[3]अर्थात् यदि अल्लाह तआ़लाले चाहेको अवस्थामा उनका इच्छाहरुका अनुसार चमत्कार प्रदर्शित गर्न सक्दछ । तर त्यसको पश्चात पनि यदि उनीहरु विश्वास गरेनन् भने अल्लाहको नियम यो छ कि यस्ता समुदायलाई तुरुन्त समाप्त गरिदिन्छ । यसकारण यस कुराको ज्ञान मात्र उसैलाई छ कि कुनै समुदायका लागि त्यसका इच्छाहरुका अनुसार चमत्कार प्रदर्शन गर्नु, त्यसको पक्षमा राम्रो छ अथवा छैन ? तथा त्यसैप्रकार यसको पनि ज्ञान मात्र उसैलाई छ कि उनका इच्छित चमत्कार यदि उनलाई देखाइएनन् भने उनीहरुलाई कति समय दिइनेछ ? यसैकारण अगाडी भनियो कि तिमी पनि प्रतिक्षा गर, म पनि तिमीसँग प्रतीक्षा गर्ने मध्येबाट हूँ ।

[4]दुखको पश्चात सुखको अर्थ हो, निर्धनता, सुख्खा तथा दुख एवं आपत्तिको पश्चात जीविकाको बाहुल्य, जीवन हेतु सामग्रीको अधिकता आदि ।

فِيْٓ اٰيَاتِنَا ۭ قُلِ اللّٰهُ اَسْرَعُ مَكْرًا ۭ اِنَّ رُسُلَنَا يَكْتُبُوْنَ مَا تَمْكُرُوْنَ ۝٢١

थाल्छन् ।[1] (तपाईं) भनिदिनुस् कि अल्लाह प्रयोजनमा तिमीभन्दा अति तीव्र छ ।[2] निःसन्देह हाम्रा फरिश्ताहरु तिम्रा छलकपटलाई लेखिराखेका छन् ।

هُوَ الَّذِيْ يُسَيِّرُكُمْ فِي الْبَرِّ وَالْبَحْرِ ۭ حَتّٰٓي اِذَا كُنْتُمْ فِي الْفُلْكِ ۚ وَجَرَيْنَ بِهِمْ بِرِيْحٍ طَيِّبَةٍ وَّفَرِحُوْا بِهَا جَاۗءَتْهَا رِيْحٌ عَاصِفٌ وَّجَاۗءَهُمُ الْمَوْجُ مِنْ كُلِّ مَكَانٍ وَّظَنُّوْٓا اَنَّهُمْ اُحِيْطَ بِهِمْ ۙ دَعَوُا اللّٰهَ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ڬ

(२२) त्यो (अल्लाह) यस्तो छ, जसले तिमीलाई जल तथा थलमा यात्रा गराउँछ ।[3] यहाँसम्मकि जब तिमी डुङ्गामा हुन्छौ, तथा ती डुङ्गाहरु मानिसहरुलाई अनूकुल वायुद्वारा लिएर तैरन्छन् तथा उनीहरु तिनीसित प्रफुल्ल हुन्छन्, अनि तिनीहरू तिर एउटा प्रचण्ड वायुको हुरी आउँछ तथा प्रत्येक दिशाबाट तरङ्गहरु उर्लन्छन् तथा उनीहरु ठान्छन् कि (नराम्रोमा) आइ घेरिए,[4] (त्यस समय)

[1]यसको अर्थ यो हो कि उनीहरु हाम्रा यी प्रदानहरुको सम्मान गर्दैनन् तथा त्यसका लागि अल्लाहप्रति कृतज्ञ हुँदैनन् बरु कुफ्र तथा शिर्क गर्न थाल्छन् अर्थात् यो उनको त्यो नराम्रो उपाय हो जसलाई अल्लाहका प्रदानहरुको तुलनामा अपनाउँछन् ।

[2]अर्थात् अल्लाहको उपाय यसभन्दा कैयन् अधिक तीव्र छ, जुन उनीहरु अपनाउँछन् । तथा त्यो यो हो कि त्यो उनलाई समात्नुको सामर्थ्य राख्दछ, त्यो जब चाहन्छ उनलाई तुरुन्त पकड्न सक्छ, तुरुन्तै पनि तथा त्यसको उपाय ढीलोको छ त पछि पनि । मकर (مكر) अरबी भाषामा उपाय तथा कूटनीतिलाई भन्दछन्, जुन राम्रो पनि हुन सक्दछ, नराम्रो पनि । यहाँ अल्लाहको दण्ड तथा पकडलाई मकर (مكر) भनिएको छ ।

[3](يسيركم) त्यो तिमीलाई डुलाउँछ अथवा हिंड्ने-डुल्ने कुराको सामर्थ्य प्रदान गर्दछ । "थलमा अर्थात् उसले तिमीलाई खुट्टा दियो, जसबाट तिमी हिंड्छौ । सवारीहरु उपलब्ध गऱ्यो, जसमा सवार भई टाढा स्थानको यात्रा गर्दछौ । तथा "जलमा" अर्थात् अल्लाह (तआला) ले तिमीलाई डुङ्गाहरु तथा जहाज बनाउनुको गुण तथा बुद्धि प्रदान गऱ्यो, तिमीले उनलाई निर्मित गऱ्यौ तथा उनीद्वारा समुद्रमा टाढासम्म यात्रा गर्दछौ ।

[4](أحيط بهم) को अर्थ हो, जुनप्रकारले शत्रु कुनै समुदाय अथवा नगरको घेरा अर्थात् नाकाबन्दी गर्दछ तथा उनी शत्रुको दया एवं कृपामा हुन्छन्, त्यसैप्रकार जब उनी तीव्र वायुका प्रहार तथा भूमरीमा घेरिन्छन् तथा मृत्यु उनका समक्ष नृत्य गरिराखेको हुन्छ ।

सबै शुद्ध विश्वास तथा आस्थाका साथ अल्लाहलाई नै पुकार्दछन्[1] कि यदि तिमी यसबाट बचाइदिन्छौ भने हामी अवश्य (तिम्रो) कृतज्ञ बन्नेछौ ।

لَئِنْ أَنجَيْتَنَا مِنْ هَٰذِهِۦ لَنَكُونَنَّ مِنَ الشَّٰكِرِينَ ﴿٢٢﴾

[1]अर्थात् फेरि उनी प्रार्थनामा अल्लाहका अतिरिक्त अन्यलाई समिश्रण गर्दैनन् जसरी सामान्य अवस्थामा गर्दछन् । सामान्य अवस्थामा उनी भन्दछन् कि यी महात्मा पनि अल्लाहका प्रिय भक्त हुन्, यिनलाई पनि अल्लाहले केही अधिकार दिएको छ तथा उनीहरुद्वारा नै हामी अल्लाहको निकटता प्राप्त गर्नको खोजीमा छौं । तर जब यसप्रकारका कठिनाईहरुमा घेरिएका हुन्छन्, तब सबै राक्षसी तर्क बिर्सन्छन् तथा मात्र अल्लाह नै याद रहन्छ तथा फेरि उसैलाई पुकार्दछन् । यसबाट एउटा कुरा विदित हुन्छ कि मनुष्यको प्रकृतिमा एक अल्लाहतिर आकर्षित हुने भावना राखिएको छ । मनुष्य समाजबाट प्रभावित भएर यस प्रकृति अथवा भावनालाई दबाइदिन्छ, तर कष्टको समय यो जागृत हुन्छ तथा यो प्रकृति प्रकट हुन्छ, जसबाट ज्ञात भयो कि एकेश्वरवाद मनुष्यको अन्तरात्माको पुकार तथा मूल वस्तु हो, जसबाट मनुष्यले मुख फर्काउनु हुन्न, किनभने यसबाट मुख फर्काउनु प्रकृतिबाट मुख फर्काउनु हो, जुन स्पष्टतया मार्ग-विचलन हो । दोस्रो कुरा यो ज्ञात भयो कि मूर्तिपूजक जब यसप्रकारका कष्टमा घेरिन्थे तब आफ्ना स्वीकृत देवताहरुका सट्टा मात्र एक अल्लाहलाई पुकार्दथे । अत: आदरणीय इकरमा बिन अबी जहलको विषयमा भनिन्छ कि जब मक्का विजय भयो त उनी त्यहाँबाट भागिहाले । बाहिर कुनै स्थानमा डुङ्गामा सवार भए त डुङ्गा तूफानको घेरामा आइपऱ्यो, जसमाथि माझीले डुङ्गाका सवारहरुसित भन्यो कि आज एक अल्लाहसित प्रार्थना गर, तिमीलाई त्यसको अतिरिक्त यस तूफानबाट कोही मुक्ति दिलाउनेवाला छैन । आदरणीय इकरमा भन्दछन् कि मैले सोंचे यदि समुद्रमा मुक्ति दिलाउने एक अल्लाह नै छ भने धर्तीमा पनि मुक्ति दिलाउने अवश्य त्यही नै छ । तथा यही कुरा मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) भन्नुहुन्छ । अत: उनले निर्णय गरिहाले यदि म यहाँबाट जीवित बाँचे भने मक्का फर्केर गई इस्लाम धर्म स्वीकार गर्नेछु । अत: उनी नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भए तथा मुसलमान भए । (رضی الله عنه) (सुनन नसाई, अबू दाऊद संख्या २६८३, तथा अल्बानीका वर्णन अनुसार 'सहीह' संख्या १७२३) तर दूर्भाग्यले मुसलमानहरुमा जनता यसप्रकारको शिर्कमा फँसेको छ कि संकटको समयमा पनि अल्लाहका अतिरिक्त अन्यलाई पुकार्दछ । मरेका महात्माहरुलाई संकटहारी ठान्दछ तथा उनैलाई सहायताको निम्ति पुकार्दछ । (فإنا لله وإنا إليه راجعون) अफसोच !

فَلَمَّآ أَنجَىٰهُمْ إِذَا هُمْ يَبْغُونَ فِى ٱلْأَرْضِ بِغَيْرِ ٱلْحَقِّ ۗ يَٰٓأَيُّهَا ٱلنَّاسُ إِنَّمَا بَغْيُكُمْ عَلَىٰٓ أَنفُسِكُم ۖ مَّتَٰعَ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا ۖ ثُمَّ إِلَيْنَا مَرْجِعُكُمْ فَنُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٢٣﴾

(२३) अनि जब अल्लाह (तआ़ला) उनलाई बचाउँछ, तब तुरुन्तै उनीहरु धर्तीमा अनर्थ उपद्रव गर्न थाल्छन् ।[1] हे मानिसहरु ! यो तिम्रो उद्दण्डता तिम्रो लागि दुखदायी हुनेछ,[2] सांसारिक जीवनका (केही) लाभ छन्, अनि तिमीलाई हाम्रो पासमा आउनुछ । त्यस पश्चात हामीले तिमीबाट गरिएका कामहरु सबै तिमीलाई बताइदिने छौं ।

إِنَّمَا مَثَلُ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا كَمَآءٍ أَنزَلْنَٰهُ مِنَ ٱلسَّمَآءِ فَٱخْتَلَطَ بِهِۦ نَبَاتُ ٱلْأَرْضِ مِمَّا يَأْكُلُ ٱلنَّاسُ وَٱلْأَنْعَٰمُ حَتَّىٰٓ إِذَآ أَخَذَتِ ٱلْأَرْضُ زُخْرُفَهَا وَٱزَّيَّنَتْ وَظَنَّ أَهْلُهَآ أَنَّهُمْ قَٰدِرُونَ عَلَيْهَآ أَتَىٰهَآ أَمْرُنَا لَيْلًا أَوْ نَهَارًا فَجَعَلْنَٰهَا حَصِيدًا كَأَن لَّمْ تَغْنَ بِٱلْأَمْسِ ۚ كَذَٰلِكَ نُفَصِّلُ ٱلْءَايَٰتِ

(२४) सांसारिक जीवनको दशा यस्तो छ, जस्तो हामीले आकाशबाट पानी बर्षायौं, अनि त्यसबाट धर्तीको वनस्पति जसलाई मनुष्य तथा पशु खान्छन्, निकै हरा-भरा भएर उम्रियो । यहाँसम्मकि जब त्यो धर्तीले आफ्नो शोभा पूरा गऱ्यो र सौन्दर्य भयो तब उसका मालिकहरुले ठाने कि अब हामी यसमाथि पूर्णरुपमा अधिकारी भयौ त दिनमा अथवा रातमा त्यसमाथि हाम्रो तर्फबाट कुनै आदेश (दुर्घटना) आइपुग्यो, अनि हामीले उसलाई फसल काटिएको जस्तो सफा गरिदियौं[3] कि मानौ हिजो

[1]यो मनुष्यको त्यही कृतघ्नताको व्यवहारको वर्णन हो, जसको वर्णन भर्खर आयत संख्या-१२ मा भइसकेको छ तथा कुरआ़नमा पनि अन्य विभिन्न स्थानहरुमा अल्लाहले यसको वर्णन गरेको छ ।

[2]अल्लाह तआ़लाले आदेश गऱ्यो कि तिमी यो कृतघ्नता तथा उद्दण्डता गरेर चार दिनको आनन्द प्राप्त गर । अन्ततः तिमीलाई हाम्रो पासमा आउनु छ अनि हामीले तिमीलाई जे-जति तिमी गर्दै आइरहेका छौ, भन्नेछौं अर्थात् त्यसको दण्ड दिनेछौं ।

[3](حصيدا) को अर्थ हो (محصودا) अर्थात् यस्तो खेती जसलाई काटेर एकातिर राखिदिइएको छ तथा खेत सफा भइहालेको छ । सांसारिक जीवनलाई यसप्रकार खेतीसित उपमा दिएर यसका अस्थायित्व तथा सामयिकतालाई प्रदर्शित गरिएको छ कि खेती पनि वर्षाको पानीले फुल्दछ-फल्दछ तर त्यसलाई पनि विनाश गरेर समाप्त पारिदिइन्छ ।

لِقَوۡمٍ يَتَفَكَّرُونَ ﴿٢٤﴾

यहाँ छँदै थिएन । हामी यसैप्रकार उनीहरूका लागि निशानीहरुलाई सविस्तार वर्णन गर्दछौं यस्ता मानिसहरुका लागि जो विचार गर्दछन् ।

وَاللّٰهُ يَدۡعُوٓاْ إِلَىٰ دَارِ السَّلَٰمِ وَيَهۡدِي مَن يَشَآءُ إِلَىٰ صِرَٰطٍ مُّسۡتَقِيمٍ ﴿٢٥﴾

(२५) तथा अल्लाह (तआला) शान्त स्थानतिर तिमीलाई बोलाउँछ तथा जसलाई चाहन्छ सोभ्को बाटो दर्शाउँछ ।

لِّلَّذِينَ أَحۡسَنُواْ الۡحُسۡنَىٰ وَزِيَادَةٌۖ وَلَا يَرۡهَقُ وُجُوهَهُمۡ قَتَرٌ وَلَا ذِلَّةٌۚ أُوْلَٰٓئِكَ أَصۡحَٰبُ الۡجَنَّةِۖ هُمۡ فِيهَا خَٰلِدُونَ ﴿٢٦﴾

(२६) जुन मानिसहरुले पुण्य गरेका छन्, उनका लागि भलाई छ तथा केही अधिक पनि[1] तथा उनका अनुहारमा न कालोपना देखिन्छ न अपमान, यिनीहरु स्वर्गमा बास गर्नेहरू हुन्, उनी त्यसमा सधैं रहनेछन् ।

وَالَّذِينَ كَسَبُواْ السَّيِّـَٔاتِ جَزَآءُ سَيِّئَةٍۭ بِمِثۡلِهَا وَتَرۡهَقُهُمۡ ذِلَّةٌۖ مَّا لَهُم مِّنَ اللّٰهِ مِنۡ عَاصِمٍۖ كَأَنَّمَآ

(२७) तथा जुन मानिसहरुले नराम्रा कर्म गरे, उनलाई नराम्रोको दण्ड त्यसै अनुरुप हुनेछ ।[2] र उनीमाथि अपमान छाएको हुन्छ, उनलाई अल्लाह (तआला) बाट कोही बचाउन सक्ने छैन ।[3] जस्तो कि उनका अनुहारमा

[1](زيادة) को कैयन् अर्थ लिएको छ, तर हदीसमा यसको व्याख्या अल्लाहको दर्शनबाट गरिएको छ, जुन स्वर्गवालाहरुलाई स्वर्ग तथा स्वर्गको सुख प्रदान गरिए पश्चात गरिनेछ । (सहीह मुस्लिम किताबुल ईमान बाब इस्बाते रुयतिल मोमिनीन् फिल आख़िरते लेरब्बेहिम)

[2]पूर्वको आयतमा स्वर्गमा निवास गर्ने मानिसहरुको वर्णन थियो, त्यसमा भनिएको थियो कि उनीहरुलाई यी पुण्य कार्यहरुको प्रतिफल कैयौं गुना प्राप्त हुनेछ तथा पछि यसबाट अधिक अल्लाहको दर्शनबाट सम्मानित हुनेछन् । यस आयतमा भनिदैछ कि नराम्रो कुराको प्रतिफल नराम्रो कुराकै बराबर हुनेछ । (سيئات) (को तात्पर्य) कुफ्र (अधर्म) तथा शिर्क तथा अन्य नराम्रा कुराहरु हुन् ।

[3]जुनप्रकार ईमान भएकाहरुलाई बचाउने अल्लाह तआला हुनेछ, त्यो त्यसदिन उनीहरुलाई आफ्नो विशेष कृपा प्रदान गर्नेछ, यसका अतिरिक्त उनका लागि अल्लाह तआला आफ्ना विशेष भक्तहरुलाई सिफारिशको आज्ञा प्रदान गर्नेछ, जसको सिफारिश त्यसले स्वीकार गर्नेछ ।

أُغْشِيَتْ وُجُوهُهُمْ قِطَعًا مِّنَ الَّيْلِ مُظْلِمًا ۚ أُولَٰٓئِكَ أَصْحَٰبُ النَّارِ ۖ هُمْ فِيهَا خَٰلِدُونَ ﴿٢٧﴾

अँध्यारो रातका टुक्राहरुले बेरिदिइएका छन् ।[1] यी मानिसहरु नरकवासी हुन्, यिनीहरु त्यसमा सधैं रहने छन् ।

وَيَوْمَ نَحْشُرُهُمْ جَمِيعًا ثُمَّ نَقُولُ لِلَّذِينَ أَشْرَكُوا۟ مَكَانَكُمْ أَنتُمْ وَشُرَكَآؤُكُمْ ۚ فَزَيَّلْنَا بَيْنَهُمْ ۖ وَقَالَ شُرَكَآؤُهُم مَّا كُنتُمْ إِيَّانَا تَعْبُدُونَ ﴿٢٨﴾

(२८) तथा त्यो दिन पनि स्मरणीय छ, जब हामीले ती सबैलाई एकत्रित गर्नेछौं ।[2] अनि मूर्तिपूजकहरुसित भन्नेछौं कि तिमी तथा तिम्रा साझेदार आफ्ना स्थानमा बस ।[3] त्यसपछि हामीले उनीहरुमा आपसी मत भेद पारिदिन्छौं ।[4] तथा उनका

[1]यो अतिशयोक्ति हो कि उनका अनुहार यति काला हुनेछन् यसका विपरीत ईमान भएकाहरुका मुख कोमल तथा प्रकाशयुक्त हुनेछन् । जस्तो कि सूरः आले-इमरान आयत संख्या-१०६ मा छ । ﴿يَوْمَ تَبْيَضُّ وُجُوهٌ وَتَسْوَدُّ وُجُوهٌ﴾ तथा (सूरः अवस-३८-४१) तथा सूरः कियामःमा छ ।

[2](جميعاً) बाट तात्पर्य आदिदेखि अन्त्यसम्मका सबै धर्तीवासी मनुष्य तथा जिन्नात हुन्, सबैलाई अल्लाह तआलाले एकत्र गर्नेछ जसरी कि अन्य स्थानमा आदेश गऱ्यो :

﴿وَحَشَرْنَٰهُمْ فَلَمْ نُغَادِرْ مِنْهُمْ أَحَدًا﴾

"हामीले उनी सबैलाई एकत्रित गर्नेछौं, कुनै एउटालाई पनि छाड्ने छैनौं ।" (सूरः कहफ़-४७)

[3]उनको अपेक्षा ईमान भएकाहरुलाई अर्कोतिर पारिनेछ । अर्थात् ईमान भएका तथा शिर्क एवं कुफ्र गर्नेहरुलाई पृथक-पृथक एक-अर्काबाट अलग गरिनेछ । जस्तो आदेश गऱ्यो :

﴿وَامْتَٰزُوا الْيَوْمَ أَيُّهَا الْمُجْرِمُونَ﴾

"हे अपराधीहरु ! आज तिमी (एक-अर्काबाट) अलग होऊ ।" (सूरः यासीन, ५९)

﴿يَوْمَئِذٍ يَصَّدَّعُونَ﴾

"त्यस दिन मानिसहरु गुटहरुमा विभाजित हुनेछन् ।" (सूरः रुम-४३) अर्थात् दुई समूहहरुमा (أي يصيرون صدعين) (इब्ने कसीर)

[4]अर्थात् संसारमा उनीहरुको आपसमा जुन विशेष सम्बन्ध थियो, त्यो समाप्त गरिदिइनेछ तथा उनीहरु एक-अर्काका शत्रु बन्नेछन् तथा उनका देवता यस कुरालाई नै नकार दिनेछन् कि यिनीहरु उनका पूजा गर्दथे, उनलाई सहायताका लागि पुकार्दथे, उनीहरुका नामको प्रसाद-भोग लगाउँथे ।

तो साझेदारहरू भन्नेछन् कि तिमी हाम्रो इबादत (पूजा) गर्दैनथ्यौ ।

فَكَفٰى بِاللّٰهِ شَهِيْدًا ۢ بَيْنَنَا وَبَيْنَكُمْ اِنْ كُنَّا عَنْ عِبَادَتِكُمْ لَغٰفِلِيْنَ ﴿٢٩﴾

(२९) त हाम्रो र तिम्रो बीचमा अल्लाह नै साक्षीको रुपमा पर्याप्त छ । हामीलाई त तिम्रो इबादतको सूचना पनि थिएन ।[1]

هُنَالِكَ تَبْلُوْا كُلُّ نَفْسٍ مَّآ اَسْلَفَتْ وَرُدُّوْٓا اِلَى اللّٰهِ مَوْلٰىهُمُ الْحَقِّ وَضَلَّ عَنْهُمْ مَّا كَانُوْا يَفْتَرُوْنَ ﴿٣٠﴾

(३०) त्यस ठाउँमा प्रत्येक व्यक्तिले आफ्ना पूर्व गरिएका कामहरुको परीक्षण गर्नेछ,[2] तथा यी मानिसहरु अल्लाहतिर जो उनको वास्तविक मालिक हो, फर्काइनेछन् तथा जे-जति झूठ (इष्टदेव) बनाएका थिए, उनीहरुबाट सबै हराउनेछन् ।[3]

[1]यो अस्वीकारको कारण हो कि हामीलाई त केही थाहा छैन तिमी के गर्ने गर्दथ्यौ तथा हामी झूठ बोलिराखेका छौं भने हाम्राबीच अल्लाह तआला साक्षी छ तथा त्यो पर्याप्त छ, उसको साक्ष्यको पश्चात कुनै अन्य साक्षीको आवश्यकता नै रहँदैन । यो आयत यस कुराको स्पष्ट प्रमाण हो कि मूर्तिपूजक जसलाई सहायताको लागि गुहारदथे, ती मात्र पत्थरका मूर्तिहरु थिएनन् । (जुनप्रकार आजकल कब्रपूजक आफ्नो कबर पूजालाई उचित सिद्ध गर्नको निम्ति भन्दछन् कि यसप्रकारका आयतहरु त मूर्तिहरुका लागि हुन् । बरु उनी बुद्धि तथा ज्ञान भएका मानिसहरु हुन्थे जसका मृत्यु पश्चात मानिसहरु उनका मूर्तिहरु बनाएर पूज्न प्रारम्भ गर्नथाल्थे । जुनप्रकार आदरणीय नूहका समुदायका कर्महरुबाट पनि सिद्ध हुन्छ, जसको विस्तृत वर्णन सहीह बुख़ारीमा लेखिएको छ । अर्को कुरा यो पनि ज्ञात भयो कि मृत्यु पश्चात मनुष्य जति ठूलो महात्मा किन नहोस्, यहाँसम्मकि नबी तथा रसूल होस्, उसलाई संसारको स्थितिको ज्ञान हुँदैन, उसका अनुयायी तथा श्रद्धालु उसलाई सहायताको निम्ति पुकार्दछन्, उसको नामको प्रसाद भोग चढाउँछन्, उसको कब्र छेउ मेला इत्यादिको आयोजन हुन्छ, परन्तु त्यो अनभिज्ञ हुन्छ तथा यी सबै कुराहरुको इन्कार यस्ता मानिसहरु कयामत (प्रलय) का दिन गर्नेछन् । यही कुरा सूरः अहक़ाफ आयत संख्या ५ तथा ६ मा वर्णित गरिएको छ ।

[2]अथवा स्वाद चाख्ने छ ।

[3]अर्थात् कुनै देवता तथा कष्टनिवारक त्यहाँ काम आउने छैन । कोही कसैको कठिनाई हटाउने सामर्थ्य राख्ने छैन ।

قُلْ مَنْ يَّرْزُقُكُمْ مِّنَ السَّمَآءِ وَ الْاَرْضِ اَمَّنْ يَّمْلِكُ السَّمْعَ وَالْاَبْصَارَ وَمَنْ يُّخْرِجُ الْحَيَّ مِنَ الْمَيِّتِ وَيُخْرِجُ الْمَيِّتَ مِنَ الْحَيِّ وَمَنْ يُّدَبِّرُ الْاَمْرَ ۚ فَسَيَقُوْلُوْنَ اللّٰهُ ۚ فَقُلْ اَفَلَا تَتَّقُوْنَ ﴿٣١﴾

(३१) (तपाईं) भन्नुहोस् कि त्यो को हो, जो तिमीलाई आकाश तथा धर्तीबाट जीविका पुऱ्याउँछ अथवा त्यो को हो जो कान तथा आँखाहरुमाथि पूर्ण अधिकार सम्पन्न छ तथा त्यो को हो जो जीउधारीलाई निर्जीवबाट निकाल्दछ तथा निर्जीवबाट सजीवलाई निकाल्दछ तथा त्यो को हो जो सबै कार्यहरुको सञ्चालन गर्दछ ? अवश्य उनी यही भन्नेछन् कि अल्लाह ।[1] त उनीसित भन्नुस् कि त्यसोभए तिमी किन तर्सन्नौ ?

فَذٰلِكُمُ اللّٰهُ رَبُّكُمُ الْحَقُّ ۚ فَمَاذَا بَعْدَ الْحَقِّ اِلَّا الضَّلٰلُ ۚ فَاَنّٰى تُصْرَفُوْنَ ﴿٣٢﴾

(३२) त यो हो अल्लाह (तआ़ला) जो तिम्रो सत्य प्रभु हो । अनि सत्य पश्चात अन्य के बाँकि रहयो विचलन बाहेक, अनि विचलित भई कहाँ जाँदैछौ ?[2]

كَذٰلِكَ حَقَّتْ كَلِمَتُ رَبِّكَ عَلَى الَّذِيْنَ فَسَقُوْٓا اَنَّهُمْ لَا يُؤْمِنُوْنَ ﴿٣٣﴾

(३३) यसैप्रकार तपाईंको प्रभुको यो कुरा कि यिनीहरूले ईमान स्थापित गर्ने छैनन्, सबै अवज्ञाकारी मानिसहरुको विषयमा सिद्ध भइसकेको छ ।[3]

[1]यस आयतबाट पनि स्पष्ट हुन्छ कि मूर्तिपूजक अल्लाहको प्रभुत्व, सृजन, स्वामित्व तथा उसको प्रत्येक कार्यलाई समाधान गर्ने स्वीकार गर्दथे तर त्यसको उपरान्त उनी उसको उपासनाका अरुहरुलाई साझेदार ठहराउँथे, यसैप्रकार अल्लाहले उनीहरुलाई नरकको इंधन बनायो । आजकलका ईमानका दावेदार पनि यसै उपासना-एकेश्वरवादका इन्कार गर्नेहरू हुन् ।

[2]अर्थात् पोषक तथा पूज्य त यही छ, जसको सम्बन्धमा तिमीलाई स्वयं स्वीकार छ कि प्रत्येक वस्तुको स्रष्टा तथा स्थायी एवं संयोजक त्यही हो । अनि यस इबादतको योग्यलाई छाडेर तिमी जो अन्यलाई देवता बनाइ हिंड्दछौ त्यो विचलनको अतिरिक्त के हो ? तिम्रो समझमा यो कुरा किन आउँदैन ? तिमी विमुख भई कहाँ जाँदैछौ ?

[3]अर्थात् जुनप्रकार मूर्तिपूजक सारा कुराहरुलाई स्वीकार गरे उपरान्त आफ्नो मूर्तिपूजामा स्थिर छन् तथा त्यसलाई त्यागनको लागि तयार छैनन् । यसैप्रकार तिम्रो प्रभुको यो कुरो सिद्ध भइहाल्यो कि यिनी विश्वास गर्नेहरू होइनन्, किनभने यिनी दोषपूर्ण मार्ग छाडेर सत्य-मार्गमा हिंड्नका निम्ति तयार छैनन्, त मार्गदर्शन

قُلْ هَلْ مِنْ شُرَكَآئِكُمْ مَّنْ يَّبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيْدُهٗ ؕ قُلِ اللّٰهُ يَبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيْدُهٗ فَاَنّٰى تُؤْفَكُوْنَ ﴿٣٤﴾

(३४) (तपाईं यसप्रकार) भन्नुहोस् कि के तिम्रा साझेदारहरुमा कोही यस्तो छ जो प्रथम पटक पनि सृष्टि गर्दछ अनि पुन: पनि सृष्टि गर्दछ ? (तपाईं) भनिदिनुस् कि अल्लाह नै पहिलो पटक पैदा गर्दछ अनि त्यही पुन: पनि पैदा गर्नेछ । अन्तत: तिमी विमुख भई कहाँ जाँदैछौ ?[1]

قُلْ هَلْ مِنْ شُرَكَآئِكُمْ مَّنْ يَّهْدِيْۤ اِلَى الْحَقِّ ؕ قُلِ اللّٰهُ يَهْدِيْ لِلْحَقِّ ؕ اَفَمَنْ يَّهْدِيْۤ اِلَى الْحَقِّ اَحَقُّ اَنْ يُّتَّبَعَ اَمَّنْ لَّا يَهِدِّيْۤ اِلَّاۤ اَنْ يُّهْدٰى ۚ فَمَا لَكُمْ ۫ كَيْفَ تَحْكُمُوْنَ ﴿٣٥﴾

(३५) (तपाईं) भन्नुस् कि तिम्रा साझेदारहरुमा कोही यस्तो छ जो सत्यको मार्ग बताउँछ ? तपाईं भनिदिनुहोस् कि अल्लाह नै सत्यको मार्ग बताउँछ ।[2] तसर्थ जुन शक्ति सत्य कुराको मार्ग बताउँछ, त्यो अधिक अनुसरण एवं पालना योग्य छ अथवा त्यो व्यक्ति जसलाई नभनिकन स्वयं नै मार्ग न

तथा ईमान उनीहरुलाई कसरी प्राप्त हुनसक्छ ? यो त्यही कुरा हो जसलाई अन्य स्थानमा यसप्रकार वर्णन गरिएको छ ।

﴿وَلٰكِنْ حَقَّتْ كَلِمَةُ الْعَذَابِ عَلَى الْكٰفِرِيْنَ﴾

"परन्तु प्रकोपको कुरो काफ़िरहरुमाथि सिद्ध भयो ।"(सूर: अज़्ज़ुमर, ७१)

[1]मूर्तिपूजकहरुको मूर्तिपूजनको खोक्रोपनालाई स्पष्ट गर्नुको निम्ति उनीसित सोधिदैछ कि भन जसलाई तिमी अल्लाहका साझेदार भन्दछौ, के उनीहरुले यस सृष्टिलाई प्रथम पटक पैदा गरेका हुन् ? अथवा पुन: त्यसलाई सृष्टि गर्नुको सामर्थ्य राख्दछन् ? होइन नि:सन्देह होइन । प्रथम पटक पैदा गर्नेवाला पनि अल्लाह नै हो तथा पुन: दोस्रो पटक त्यसैले कयामत (प्रलय) का दिन सबैलाई जीवित गर्नेछ, त तिमी प्रकाशको मार्ग छाडेर कता जाँदैछौ ?

[2]अर्थात् भ्रमित यात्रीहरुको मार्ग बनाउने तथा हृदयलाई विचलनबाट सत्यतिर फर्काउने पनि अल्लाह तआ़ला नै हो । उनका साझेदारहरुमा यस्तो कोही छैन जो यस कार्यलाई गर्न सकोस् ।

देखियोस् ?[१] त तिमीलाई के भएको छ, तिमीले कस्ता निर्णय गर्दछौ ?[२]

وَمَا يَتَّبِعُ أَكْثَرُهُمْ إِلَّا ظَنًّا ۚ إِنَّ الظَّنَّ لَا يُغْنِي مِنَ الْحَقِّ شَيْئًا ۚ إِنَّ اللَّهَ عَلِيمٌ بِمَا يَفْعَلُونَ ﴿٣٦﴾

(३६) तथा उनीहरूमध्ये अधिकतर मानिसहरु निराधार (अनुमानित) विचारहरुमा हिंडिराखेका छन्। निःसन्देह निर्मूल (अनुमानित) विचार सत्य (को पहिचान) मा अलिकति पनि काम लाग्दैन ।[३] यिनीहरु जे-जति गरिराखेका छन् निःसन्देह अल्लाह सबै जान्दछ ।[४]

وَمَا كَانَ هَٰذَا الْقُرْآنُ أَنْ يُفْتَرَىٰ مِنْ دُونِ اللَّهِ وَلَٰكِنْ تَصْدِيقَ الَّذِي بَيْنَ يَدَيْهِ وَتَفْصِيلَ الْكِتَابِ

(३७) तथा यो कुर्आन यस्तो छैन कि अल्लाह (को प्रकाशना) बाहेक (स्वयं नै) रचिएको छ, बरु यो त (ती किताबहरु) को प्रमाण पुस्तक हो, जो यसभन्दा पूर्व

[१]अनि अनुसरण योग्य को छ ? त्यो व्यक्ति जो देख्दछ, सुन्दछ तथा मानिसहरुलाई सत्यतिर मार्गदर्शन गर्दछ ? अथवा जो अन्धा तथा बहिरो हुनुको कारण स्वयं मार्गमा हिंड्न पनि सक्दैन, जबसम्मकि अन्य मानिसहरु त्यसलाई मार्गमा पुऱ्याउँदैन अथवा हात समातेर लग्दैनन् ?

[२]अर्थात् तिम्रो बुद्धिलाई के भएको छ, तिमी कुनप्रकारले अल्लाह तथा त्यसको सृष्टिलाई उसको समान ठहराइराखेका छौं ? तथा अल्लाहका साथ अरुहरुलाई पनि इबादतमा साझेदार बनाइराखेका छौ ? जबकि यी प्रमाणहरुको माँग छ कि मात्र यसै एक अल्लाहलाई इबादत (आराधना) को योग्य मानियोस् तथा सर्वप्रकारका इबादतहरु उसैको लागि विशेषरुपले मानियोस् ।

[३]परन्तु कुरो यो छ कि मानिसहरु निराधार कुराहरुमा हिंड्दछन्, यद्यपि जान्दछन् कि प्रमाणहरुका सापेक्ष अन्धविश्वास, अनुमान तथा कल्पना एवं विचारको कुनै महत्व छैन, कुर्आनमा (ظن) विश्वास तथा अनुमान दुवै अर्थहरुमा प्रयोग भएको छ । यहाँ दोस्रो अर्थमा लिइएको छ ।

[४]अर्थात् यस हठधर्मीको दण्ड त्यसले दिनेछ कि प्रमाण नराख्नु उपरान्त यो मात्र अन्धविश्वास तथा कुविचारहरुका पछाडी लागिरहे तथा बुद्धि तथा समझले अलिकति पनि काम लिएनन् ।

لَا رَيْبَ فِيهِ مِن رَّبِّ الْعَالَمِينَ ﴿٣٧﴾

(अवतरित) भइसकेको छ,[1] तथा पुस्तक (आवश्यक नियमहरु) को विस्तृत वर्णन हो ।[2] यसमा कुनै कुरा सन्देह[3] को छैन किनकि आखिल जगतको प्रभुको तर्फबाट छ ।[4]

أَمْ يَقُولُونَ افْتَرَاهُ ۖ قُلْ فَأْتُوا بِسُورَةٍ مِّثْلِهِ وَادْعُوا مَنِ اسْتَطَعْتُم مِّن دُونِ اللَّهِ إِن كُنتُمْ صَادِقِينَ ﴿٣٨﴾

(३८) के यिनीहरु यस्तो भन्दछन् कि तपाईंले त्यसलाई रच्नु भएको छ ? (तपाईं) भनिदिनुस् कि तब त्यसो भए तिमी यसको जस्तो एउटै सूरः ल्याऊ तथा अल्लाहका अतिरिक्त जस-जसलाई बोलाउन सक्तछौ तिनीहरुलाई बोलाऊ यदि तिमी सत्यवादी हौ ।[5]

---

[1]जुन यस कुराको प्रमाण हो कि कुरआन मनगढन्त रचिएको होइन वरु त्यस शक्तिद्वारा अवतरित गरिएको हो ।

[2]अर्थात् हराम एवं हलाल तथा उचित एवं अनुचितको विस्तृत वर्णन गर्ने ।

[3]त्यसका शिक्षाहरुमा, त्यसका वर्णित कथा तथा घटनाहरुमा तथा भविष्यमा हुने घटनाहरुको विषयमा ।

[4]यी सबै कुराहरु स्पष्ट गर्दछन् कि यी अखिल जगतको प्रभुको तर्फबाट अवतरित गरिएका हुन्, "जो भूतको ज्ञाता" पनि हो तथा "भविष्यको ज्ञाता" पनि ।

[5]यी सबै यथार्थ तथा प्रमाणका उपरान्त पनि यदि तिम्रो यही दाबी छ कि यो कुरआन मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) द्वारा रचिएको छ त, त्यो पनि तिमी सरह नै एउटा मनुष्य हो, तिम्रो भाषा पनि त्यसको जस्तो अरबी हो । त्यो त एक छ, तिमी यदि आफ्नो दावीमा साँचो हौ भने तिमी संसारभरिका साहित्यकार, ज्ञानी, वाकपटुतामा दक्ष तथा वैज्ञानिक एवं लेखकहरुलाई एकत्र गर तथा यस कुरआनको एउटा सानोभन्दा सानो सूरःको समान प्रस्तुत गर । कुरआन करीमको यो चुनौती आजसम्म उत्तर पाउन सकेन, जसको स्पष्ट अर्थ यो हो कि यो कुरआन कुनै व्यक्तिद्वारा कल्पित तथा बनाइएको होइन, वरु वास्तवमा अल्लाहको कथन हो जुन परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लममाथि अवतरित भएको छ ।

بَلْ كَذَّبُوا بِمَا لَمْ يُحِيطُوا بِعِلْمِهِ وَلَمَّا يَأْتِهِمْ تَأْوِيلُهُ ۚ كَذَٰلِكَ كَذَّبَ الَّذِينَ مِن قَبْلِهِمْ ۖ فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الظَّالِمِينَ ﴿٣٩﴾

(३९) बरु उनीहरुले यस्तो कुरोलाई असत्य भन्नथाले जसलाई आफ्नो ज्ञानको परिधिमा ल्याएनन्[1] तथा अझै उनलाई यसको अन्तिम परिणाम प्राप्त भएन ।[2] जुन मानिसहरु उनीभन्दा पूर्व थिए, उनीहरुले पनि त्यसै गरीं झुठ्लाएका थिए, त हेरिहाल्नुस् कि ती अत्याचारीहरुको अन्त कस्तो भयो ?[3]

وَمِنْهُم مَّن يُؤْمِنُ بِهِ وَمِنْهُم مَّن لَّا يُؤْمِنُ بِهِ ۚ وَرَبُّكَ أَعْلَمُ بِالْمُفْسِدِينَ ﴿٤٠﴾

(४०) तथा उनीहरुमध्ये केही यस्ता छन्, जो यसमाथि ईमान सुदृढ गर्ने छन् तथा केही यस्ता छन् जसले त्यसमाथि ईमान स्थापित गर्ने छैनन् । तथा तपाईंको प्रभु भ्रष्टाचारीहरुलाई राम्ररी जान्दछ ।[4]

[1]अर्थात् कुर्‌आनमा चिन्तन तथा त्यसका अर्थहरुमा विचार नगरिकन, त्यसलाई झुट्लाउन तल्लीन भए ।

[2]अर्थात् कुर्‌आनले जुन पूर्वका घटनाहरु तथा भविष्यका सम्भावनाहरुको वर्णन गरेको छ, त्यसको पूर्ण सत्यता एवं वास्तविकता पनि उनलाई स्पष्ट भएन, त्यो नभईकन झुठ्लाउन प्रारम्भ गरिदिए अथवा दोस्रो भावार्थ यो हो कि उनीहरुले कुर्‌आनको बारेमा उचित चिन्तन नगरीकनै त्यसलाई झुट्लाए, यद्यपि उनी सही अर्थहरुमा प्रयत्न गरेको भए तथा ती कुराहरुमा विचार गरेको भए, जुन यसलाई अल्लाहको कथन हुने कुराको प्रमाण प्रस्तुत गर्दछन्, त निःसन्देह त्यसको अर्थका द्वार उनीहरुका लागि खुल्थे । यस अवस्थामा (تأويل) को अर्थ, कुर्‌आन करीमको प्रस्तुति एवं रहस्य एवं अर्थको अस्पष्ट हुने कुरो हुनेछन् ।

[3]यो ती काफ़िर तथा मूर्तिपूजकहरुलाई चेतावनी दिएर सावधान गरिदैछ कि तिमीभन्दा पूर्वका समुदायहरुले पनि अल्लाहका आयतहरुलाई असत्य भने त हेरिहाल उनको के परिणाम भयो ? यदि तिमी यसलाई झुट्लाउनबाट रोकिएनौ भने तिम्रो पनि परिणाम यसबाट भिन्न हुनेछैन ।

[4]त्यो राम्ररी जान्दछ कि मार्गदर्शनको अधिकारी को छ, त्यसलाई मार्गदर्शन प्रदान गरिदिन्छ तथा मार्ग-विचलनको अधिकारी को छ, त्यसको लागि पथभ्रष्टताको द्वार पूर्णरुपमा खोलिदिन्छ । त्यसले न्याय गर्दछ हो, त्यसको कुनै काममा लेशमात्र पनि अत्याचार छैन ।

(४१) तथा यदि उनीहरुले तपाईलाई झुट्लाई रहन्छन् भने यो भनिदिनुस् कि मैले गरेको मलाई प्राप्त हुनेछ तथा तिमीले गरेको तिमीलाई प्राप्त हुनेछ। तिमी मैले गरिएका कुराको उत्तरदायी होइनौ र म तिमीबाट गरिएका कुराको उत्तरदायी होइन।[1]

وَإِن كَذَّبُوكَ فَقُل لِّي عَمَلِي وَلَكُمْ عَمَلُكُمْ ۖ أَنتُم بَرِيئُونَ مِمَّا أَعْمَلُ وَأَنَا بَرِيءٌ مِّمَّا تَعْمَلُونَ ﴿٤١﴾

(४२) तथा उनीहरुमा केही यस्ता छन् जो तपाईंतिर कान थाप्छन्। के तपाईंले बहिराहरुलाई सुनाउनु हुन्छ चाहे उनलाई बुद्धि पनि नहोस्?[2]

وَمِنْهُم مَّن يَسْتَمِعُونَ إِلَيْكَ ۚ أَفَأَنتَ تُسْمِعُ الصُّمَّ وَلَوْ كَانُوا لَا يَعْقِلُونَ ﴿٤٢﴾

(४३) तथा उनीहरूमध्ये केही यस्ता छन् जो तपाईंलाई देखिराखेका छन्। अनि के तपाईं अन्धाहरुलाई मार्ग

وَمِنْهُم مَّن يَنظُرُ إِلَيْكَ ۚ أَفَأَنتَ

जो जुन कुराको योग्य हुन्छ, त्यस अनुसार त्यो कुरो त्यसलाई प्रदान गर्दछ।

[1]अर्थात् हरेक प्रकारले सम्झाउनु तथा प्रमाण प्रस्तुत गर्नुका पश्चात पनि यदि त्यो झुट्लाउन बन्द गर्दैन भने तपाईं यो भनिदिनुस्, अर्थ यो हो कि मेरो काम मात्र आमन्त्रण दिनु तथा सचेत गर्नु हो त त्यो मैले गरिसकेको छु। अब न तिमी मेरा कामका उत्तरदायी हौ न म तिम्रा कामहरुको, सबैलाई अल्लाहको दरबारमा प्रस्तुत हुनुछ, त्यहाँ प्रत्येक व्यक्तिसित त्यसका राम्रा तथा नराम्रा कामहरुको सोधपूछ हुनेछ। यो त्यही कुरा हो जुन ﴿قُلْ يَا أَيُّهَا الْكَافِرُونَ ۝ لَا أَعْبُدُ مَا تَعْبُدُونَ﴾ मा छ तथा आदरणीय इब्राहीमले यी शब्दहरुमा भन्नुभएको थियो।

﴿إِنَّا بُرَآءُ مِنكُمْ وَمِمَّا تَعْبُدُونَ مِن دُونِ اللَّهِ كَفَرْنَا بِكُمْ﴾

"नि:सन्देह हामी तिमीबाट अलग्ग छौं तथा जसको तिमी, अल्लाहका अतिरिक्त पूजा गर्दछौ उनीहरुबाट, हामी तिम्रा (मत) लाई नकार्ने छौ।" (सूर: अल-मुमतहेन:-४)

[2]अर्थात् देखावटीका लागि त कुर्आन सुन्दछन् तर सुन्नुको अर्थ मार्गदर्शन प्राप्त गर्नु होइन, यस कारण त्यसैप्रकार कुनै लाभ हुँदैन, जुनप्रकार एउटा बहिरालाई लाभ हुँदैन, विशेषरुपले जब बहिरासित बुद्धि हुँदैन किनभने बुद्धिमानी बहिरा तैपनि संकेतले केही बुझ्छ। परन्तु त्यसको तुलना अबोध बहिराको समान छ, जो बिल्कुलै बहिरो छ।

تَهۡدِي ٱلۡعُمۡيَ وَلَوۡ كَانُواْ لَا يُبۡصِرُونَ ٤٣

देखाउनु चाहनु हुन्छ, चाहे उनलाई दृष्टि पनि नहोस् ?[1]

إِنَّ ٱللَّهَ لَا يَظۡلِمُ ٱلنَّاسَ شَيۡـٔٗا وَلَٰكِنَّ ٱلنَّاسَ أَنفُسَهُمۡ يَظۡلِمُونَ ٤٤

(४४) यो विश्वस्त कुरो हो कि अल्लाह मानिसहरूमाथि अलिकति पनि अत्याचार गर्दैन । परन्तु मानिसहरू स्वयं नै आफूमाथि अत्याचार गर्दछन् ।[2]

وَيَوۡمَ يَحۡشُرُهُمۡ كَأَن لَّمۡ يَلۡبَثُوٓاْ إِلَّا سَاعَةٗ مِّنَ ٱلنَّهَارِ يَتَعَارَفُونَ بَيۡنَهُمۡۚ قَدۡ خَسِرَ ٱلَّذِينَ كَذَّبُواْ بِلِقَآءِ ٱللَّهِ وَمَا كَانُواْ مُهۡتَدِينَ ٤٥

(४५) तथा उनीहरूलाई त्यो दिन स्मरण गराउनुस् जसमा अल्लाहले उनलाई (आफ्नो सेवामा) यस अवस्थामा एकत्रित गर्नेछ (कि उनीहरूलाई लाग्ला) कि (संसारमा) सम्पूर्ण दिनको एकाध क्षण रहेका हुन्[3] तथा संसारमा एक-अर्कालाई चिन्नको लागि उभिएका

[1]यसैप्रकार केही मानिसहरू तपाईंतिर हेर्दछन्, परन्तु उद्देश्य उनको पनि केही अरू हुन्छ, यसकारण उनीहरूलाई पनि त्यसैप्रकार लाभ हुँदैन, जुनप्रकारले एउटा अन्धोलाई हुँदैन । विशेषरूपले त्यो अन्धो जो दृष्टिका साथ-साथै बुद्धिबाट पनि बञ्चित हुन्छ । केही अन्धा हृदयको दृष्टि राख्दछन्, उनी आँखाको ज्योतिबाट बञ्चित हुनुको उपरान्त धेरैजसो कुरा बुझ्छन् । परन्तु उनको तुलना यस्तो छ, जस्तो कोही अन्धो होस्, जो हृदयको दृष्टि ज्योतिबाट पनि बञ्चित होस् । उद्देश्य यी सबै कुराहरूद्वारा नबी सल्लल्लाहु अलैहि वसल्लमको सान्त्वना हो । जुनप्रकार एउटा वैद्य तथा चिकित्सकलाई जब यो ज्ञात हुन्छ कि रोगी उपचार गराउनको लागि तैयार छैन तथा त्यो मेरो निर्देश तथा चिकित्साको चिन्ता गर्दैन त त्यसले उसलाई बेवास्ता गरिदिन्छ तथा त्यो उसको लागि आफ्नो समय नष्ट गर्न चाहँदैन ।

[2]अर्थात् अल्लाह तआलाले उनीहरूलाई सारा कुरा प्रदान गरेको छ, आँखा पनि दिएको छ जसबाट हेर्न सक्छन्, कान दिएको छ जसबाट सुन्न सक्दछन्, बुद्धि तथा ज्ञान दिएको छ जसबाट सत्य तथा असत्य एवं झूट तथा सत्य बीच अन्तर गर्न सक्दछन् । परन्तु यी शक्तिहरूको यदि उचित प्रयोग गरी सत्यको मार्ग अपनाउँदैनन् भने यी स्वयं नै आफूमाथि अत्याचार गरिराखेका हुन्छन् । अल्लाह तआलाले उनीमाथि कुनै अत्याचार गरेको छैन ।

[3]अर्थात् प्रलयका कठिनाईहरू देखेर संसारका सारा स्वाद बिर्सनेछन् तथा संसारको जीवन उनीहरूलाई यस्तो प्रतीत हुनेछ कि जस्तो उनीहरू संसारमा एकाध क्षण नै बिताएका छन् ।

हुन् ।[१] वास्तवमा हानिमा परे ती मानिसहरू जसले अल्लाह छेउ जाने कुरालाई भुट्लाए तथा उनीहरू मार्गदर्शन प्राप्त थिएनन् ।

وَإِمَّا نُرِيَنَّكَ بَعْضَ الَّذِي نَعِدُهُمْ أَوْ نَتَوَفَّيَنَّكَ فَإِلَيْنَا مَرْجِعُهُمْ ثُمَّ اللَّهُ شَهِيدٌ عَلَىٰ مَا يَفْعَلُونَ ۝٤٦

(४६) तथा हामी जुन कुरोको उनीसित वाचा गरिराखेका छौं, त्यसमध्ये केही चाहे तपाईंलाई देखाइदेऔं अथवा (उनीहरू प्रकट हुनुभन्दा पूर्व) हामी तपाईंलाई मृत्यु दिदेऔं, उनीहरू त हाम्रो पासमा आउनु नै छ। अनि अल्लाह उनका सबै कर्महरूको साक्षी छ ।[२]

وَلِكُلِّ أُمَّةٍ رَّسُولٌ ۖ فَإِذَا جَاءَ

(४७) तथा प्रत्येक समुदायको लागि एक रसूल (सन्देशवाहक) छ, अनि जब उनको रसूल

[१]प्रलयमा विभिन्न अवस्थाहरू हुनेछन्, जसलाई कुर्आनमा विभिन्न स्थानहरूमा वर्णन गरिएको छ कि एक-अर्कालाई चिन्नेछन्, केही अवसर यस्ता आउनेछन् कि आपसमा एक-अर्कामाथि मार्ग विचलनको दोषारोपण गर्नेछन् । कुनै-कुनै अवसरमा यस्तो भयभीत हुनेछन् कि

﴿فَلَا أَنسَابَ بَيْنَهُمْ يَوْمَئِذٍ وَلَا يَتَسَاءَلُونَ﴾

"आपसमा एक-अर्काका सम्बन्धहरूलाई न थाहा हुनेछ तथा न एक-अर्कालाई सोध्नेछन् ।" (सूरः अल-मोमिनून-१०१)

[२]यस आयतमा अल्लाह तआला भनिराखेको छ कि हामी ती काफिरहरूका विषयमा जुन वाचा गरिराखेका छौं, यदि उनीहरूले कुफ्र (अधर्म) तथा मूर्तिपूजालाई प्रचलित राखे भने उनीमाथि पनि त्यसैप्रकार अल्लाहको प्रकोप आउन सक्दछ, जुनप्रकारले पूर्वका समुदायहरूमाथि आयो, यिनीहरूमध्ये केही यदि तपाईंको जीवनमै पठाइदिन्छौं भने यो पनि संभव छ कि यसबाट तपाईंका आँखा शीतल हुन्छन् अर्थात सन्तुष्टि हुन्छ । परन्तु यदि तपाई यसभन्दा पूर्व नै संसारबाट उठाइनु भयो, तैपनि केही कुरो छैन, यी काफिरहरूलाई अन्तमा हाम्रो पासमा आउनु छ । यिनका सारा कर्महरू तथा अवस्थाको हामीलाई सूचना छ, त्यहाँ यिनीहरु हाम्रा यातनाबाट कसरी बाँच्ने छन् ? अर्थात् संसारमा सम्भव छ कि हाम्रा विशेष रहस्यका कारण यातनाबाट बाँच्न सकून् । परन्तु आख़िरतमा त उनलाई हाम्रा यातनाहरूबाट बाँच्न सम्भव छैन किनभने प्रलय आउनुको उद्देश्य नै यो हो कि त्यहाँ आज्ञा पालकहरूलाई उनको आज्ञा पालनको फल तथा अवहेलना गर्नेहरूलाई उनको अवज्ञाको दण्ड दिइनेछ ।

رَسُوْلُهُمْ قُضِيَ بَيْنَهُمْ بِالْقِسْطِ وَهُمْ لَا يُظْلَمُوْنَ ﴿٤٧﴾

आउँछ, तब उनको निर्णय न्यायका साथ गरिन्छ।[1] उनीहरूमाथि अत्याचार गरिँदैन।

وَيَقُوْلُوْنَ مَتٰى هٰذَا الْوَعْدُ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٤٨﴾

(४८) तथा यिनीहरू भन्दछन् कि यदि तिमी साँचो हौ भने यो बचन कहिले पूरा हुन्छ ?

قُلْ لَّآ اَمْلِكُ لِنَفْسِيْ ضَرًّا وَّلَا نَفْعًا اِلَّا مَا شَآءَ اللّٰهُ ؕ لِكُلِّ اُمَّةٍ اَجَلٌ ؕ اِذَا جَآءَ اَجَلُهُمْ

(४९) (तपाईं) भनिदिनुस् कि मलाई आफ्नो लागि न त कुनै हानीको अधिकार प्राप्त छ र न त लाभको बरू अल्लाहले जे चाहन्छ त्यही हुन्छ। प्रत्येक समुदायको लागि एउटा निर्धारित समय छ। जब उनको त्यो निर्धारित

[1]यसको अर्थ त यो हो कि प्रत्येक समुदायमा हामीले रसूल पठाउँदै गर्‍यौं। तथा जब रसूल आफ्नो सचेत गराउने तथा सन्देश पुर्‍याउने कर्तव्य पूरा गर्दथ्यो त हामी उनीहरू बीच न्यायकासाथ निर्णय गरिदिन्थ्यौं। अर्थात् पैग़म्बर तथा उनीमाथि निष्ठा राख्नेहरूलाई बचाउँथ्यौं। अर्थात् अरूलाई नष्ट गरिदिन्थ्यौं। किनभने :

﴿وَمَا كُنَّا مُعَذِّبِيْنَ حَتّٰى نَبْعَثَ رَسُوْلًا﴾

"तथा हाम्रो रीति यो होइन कि सन्देशवाहक पठाउनुभन्दा पूर्व नै दण्ड दिन थालौं।" (सूर: बनी इस्राईल-१५) तथा यस निर्णयमा उनीमाथि कुनै अत्याचार हुँदैनथ्यो, किनभने अत्याचार त तब हुन्थ्यो जब बिना पाप उनीमाथि प्रकोप पठाइन्थ्यो अथवा सतर्क नगरीकन उनीहरूलाई घेरिन्थ्यो। (फ़तहुल क़दीर) दोस्रो भावार्थ यो वर्णन गरिएको छ कि यसको सम्बन्ध केयामत (प्रलय) सित छ अर्थात् केयामतका दिन सबै समुदाय जब अल्लाहको दरबारमा प्रस्तुत हुनेछन्, त त्यस समुदायमा पठाइएको रसूल पनि साथमा हुनेछ। सबैका कर्मपत्र पनि हुनेछन् तथा फरिश्ताहरू पनि साक्षीको रूपमा प्रस्तुत हुनेछन्। तथा यसप्रकार हरेक समुदाय तथा त्यसका रसूलका बीच न्यायकपूर्वक निर्णय गरिनेछ। तथा हदीसमा वर्णित छ कि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको समुदायको वर्णन सर्वप्रथम हुनेछ। जस्तो कि भन्नुभयो: "हामी यद्यपि सबभन्दा पछि आएका हौं तर केयामतमा सबभन्दा अगाडी हुनेछौं, तथा सम्पूर्ण सृष्टिभन्दा पहिला हाम्रो निर्णय गरिनेछ।" (सहीह मुस्लिम किताबुल जुमुअ: बाब हिदायति हाज़ेहिल उम्म: लेयौमिल जुमुअ:) (तफ़सीर इब्ने क़सीर)।

فَلَا يَسْتَأْخِرُونَ سَاعَةً وَلَا يَسْتَقْدِمُونَ ﴿٤٩﴾

समय आइपुग्छ त, एक क्षण न पछाडी हट्न सक्तछन् न अगाडी बढ्न सक्दछन् ।[1]

قُلْ أَرَءَيْتُمْ إِنْ أَتَاكُمْ عَذَابُهُ بَيَاتًا أَوْ نَهَارًا مَّاذَا يَسْتَعْجِلُ مِنْهُ الْمُجْرِمُونَ ﴿٥٠﴾

(५०) (तपाईं) भनिदिनुस् कि यो त भन कि यदि तिमी माथि अल्लाहको प्रकोप र राति आई पर्छ अथवा दिनमा, त त्यसमा कुन चाहिं यस्तो कुरो छ कि अपराधीहरू त्यसलाई शीघ्र माँगिराखेका छन् ?[2]

---

[1]यो मूर्तिपूजकहरूद्वारा अल्लाहको प्रकोपको माँगमा भनिदैछ कि म त आफ्नो स्वयंको लाभ-हानिको अधिकार राख्दिन भने किन अरूहरूलाई लाभ तथा नोक्सानी पुऱ्याउ ? हो, यो सारा अधिकार अल्लाहकै हातमा छ तथा त्यो आफ्नो इच्छा अनुसार नै कसैलाई लाभ अथवा हानि पुऱ्याउने कुराको निर्णय गर्दछ । यसका अतिरिक्त अल्लाह तआलाले प्रत्येक समुदायका लागि एउटा समय निर्धारित गरेको छ, यस निर्धारित समयसम्म अवसर दिन्छ । तर जब त्यो समय आइपुग्छ त ती एक क्षण पछाडी हुन सक्दैनन् न अगाडी जान सक्छन् ।

**टिप्पणी :** यहाँ यो कुरो अति आवश्यक छ कि जब सर्वोत्तम पुरुष रसूलहरूका प्रमुख मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई पनि कसैलाई लाभ-हानि पुऱ्याउने कुरोमा वश छैन, त उहाँ सल्लल्लाहु अलैहि वसल्लमका पश्चातका मानिसहरूमा कुन चाहिं व्यक्ति यस्तो हुनसक्दछ, जसले कसैको आवश्यकताको पूर्ति गर्दछ तथा कष्ट निवारणमा वश (सामर्थ) राख्दछ ? यसप्रकार स्वयं अल्लाहको पैगम्बरसित सहायता माँग्नु, उनीसित विन्ती गर्नु, "हे रसूलुल्लाह अलमदद" तथा "أَغِثْنِي يَا رَسُولَ اللهِ" आदि शब्दले पुकार्नु अथवा ध्यान लगाउनु कुनै पनि प्रकार उचित छैन किनकि यो कुर्आनको यस आयत तथा यसैप्रकारका अन्य स्पष्ट शिक्षाहरूको विरूद्ध छ, वरू यो शिर्कको परिधिमा आउँछ ।

[2]अर्थात् प्रकोप त अत्यन्त अप्रिय वस्तु हो, जससित हृदयहरू घृणा गर्छन् तथा इच्छाहरू अस्वीकार गर्दछन्, अनि यी त्यसमा के राम्रोपना देख्दछन् कि त्यसलाई शीघ्र ल्याउन माँग गर्दछन् ।

أَثُمَّ إِذَا مَا وَقَعَ آمَنتُم بِهِ ۚ آلْآنَ وَقَدْ كُنتُم بِهِ تَسْتَعْجِلُونَ ﴿٥١﴾

(५१) अनि के जब त्यो आईपुग्छ त्यतिखेर त्यसमा विश्वास गर्नेछौ ? हो अब मान्यौ[1] जब कि त्यसको लागि शिघ्रता गरिराखेका थियौ ।

ثُمَّ قِيلَ لِلَّذِينَ ظَلَمُوا ذُوقُوا عَذَابَ الْخُلْدِ هَلْ تُجْزَوْنَ إِلَّا بِمَا كُنتُمْ تَكْسِبُونَ ﴿٥٢﴾

(५२) अनि अत्याचारीहरूसित भनिनेछ कि अब स्थाई यातनाको स्वाद चाख । तिमीलाई त तिमीबाट गरिएकै कुराको फल प्राप्त भएछ ।

وَيَسْتَنۢبِـُٔونَكَ أَحَقٌّ هُوَ ۖ قُلْ إِي وَرَبِّي إِنَّهُ لَحَقٌّ ۖ وَمَا أَنتُم بِمُعْجِزِينَ ﴿٥٣﴾

(५३) तथा उनीहरू तपाईंसित सोध्छन् कि के त्यो (प्रकोप) वास्तविक कुरा हो ?[2] (तपाईं) भनिदिनुस् कि हो, सौगन्ध छ मेरो प्रभुको कि त्यो वास्तविक कुरो हो तथा तिमी अल्लाहलाई कुनै प्रकारले पनि विवश गर्न सक्दैनौ ।

وَلَوْ أَنَّ لِكُلِّ نَفْسٍ ظَلَمَتْ مَا فِي الْأَرْضِ لَافْتَدَتْ بِهِ ۗ وَأَسَرُّوا النَّدَامَةَ لَمَّا رَأَوُا الْعَذَابَ ۖ وَقُضِيَ بَيْنَهُم بِالْقِسْطِ ۖ وَهُمْ

(५४) तथा यदि प्रत्येक प्राणसित जसले अत्याचार (मिश्रण) गरेको छ, यति छ कि सम्पूर्ण धर्ती भरिन्छ तैपनि त्यसलाई दिएर आफ्नो प्राण बचाउन लागोस्,[3] तथा जब प्रकोप देख्छन् त लज्जालाई लुकाएर राख्छन् तथा

[1]परन्तु प्रकोप आएपश्चात मान्नुको के लाभ ?

[2]अर्थात् यो सोध्छन् कि पुर्नजन्म, प्रलय तथा उनको पुन: जीवित हुनु सत्य हो ? अल्लाह तआलाले भन्यो हे पैग़म्बर ! यिनीहरूसित भनिदिनुस् कि तिमी माटो भएर माटोमा मिसिएर जानु, अल्लाह तआलालाई पुन: जीवित गर्नुबाट रोक्न सक्दैन । यसकारण यो अवश्य भएर नै रहनेछ । इमाम इब्ने क़सीर भन्नुहुन्छ कि यस आयतको सन्दर्भमा कुर्आनमा अन्य मात्र दुई आयत छन् जसमा अल्लाह तआलाले आफ्नो पैग़म्बरलाई आदेश दिएको छ कि उनी सौगन्ध खाएर केयामत (प्रलय) आउने कुराको घोषणा गरून् । एउटा सूर: सबा आयत संख्या ३ तथा दोस्रो सूर: तग़ाबुन आयत संख्या ७

[3]अर्थात् यदि संसारभरिका कोष दिएर यातनाबाट मुक्त हुन्छन् भने दिनलाई तैयार हुनेछन् । तर त्यहाँ कोहीसित हुने नै छ कि ? अर्थात् यातनाबाट छुटकारा पाउनुको कुनै मार्ग हुनेछैन ।

لَا يُظْلَمُونَ ۝٥٤

उनको निर्णय न्यायपूर्वक हुनेछ र उनीमाथि अत्याचार हुनेछैन ।

أَلَآ إِنَّ لِلّٰهِ مَا فِى السَّمٰوٰتِ وَالْأَرْضِ ۗ أَلَآ إِنَّ وَعْدَ اللّٰهِ حَقٌّ وَّلٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ۝٥٥

(५५) याद राख कि जति पनि कुरा आकाशहरू तथा धर्तीमा छन्, सबै अल्लाहकै स्वामित्वमा छन् । याद राख कि अल्लाहको वाचा सत्य छ तर धेरैजसो मानिसहरू ज्ञान राख्दैनन् ।

هُوَ يُحْيِۦ وَيُمِيتُ وَإِلَيْهِ تُرْجَعُونَ ۝٥٦

(५६) त्यसैले प्राण हाल्छ, त्यसैले प्राण निकाल्दछ तथा तिमी सबै उसैको पासमा ल्याइनेछौ ।[1]

يٰٓأَيُّهَا النَّاسُ قَدْ جَآءَتْكُم مَّوْعِظَةٌ مِّن رَّبِّكُمْ وَشِفَآءٌ لِّمَا

(५७) हे मानिसहरू ! तिम्रो पासमा तिम्रो प्रभुको तर्फबाट एउटा यस्तो कुरो आएको छ, जुन शिक्षाप्रद छ ।[2] तथा हृदयहरूमा जुन (रोग) छ तिनका लागि

[1]यी आयतहरूमा आकाश तथा धर्तीका मध्य प्रत्येक वस्तुमाथि अल्लाह तआलाको स्वामित्व, अल्लाहको वाचा सत्य हुनु, जीवन-मृत्युमाथि उसको अधिकार तथा उसको दरबारमा सबैको उपस्थितिको वर्णन छ, जसबाट उद्देश्य पूर्व कुराहरूको पुष्टि एवं सहमति हो कि जुन शक्ति यति अधिकारहरूको मालिक छ, उसको पकडबाट उम्केर कोही कहाँ जानसक्छ ? तथा उसले लेखाजोखाको लागि जुन दिन निर्धारित गरेको छ, त्यसलाई कसले हटाउन सक्छ ? नि:सन्देह अल्लाहको वाचा सत्य छ, त्यो एक दिन अवश्य आउनेछ तथा प्रत्येक राम्रो-नराम्रोलाई त्यसका कर्म अनुसार पुण्य तथा दण्ड दिइनेछ ।

[2]अर्थात् जसले कुर्आनलाई हार्दिकरुपले पढ्नेछ तथा त्यसको अर्थ तथा भावमा विचार गर्दछ, उसको लागि कुर्आन शिक्षा हो । शिक्षा एवं उपदेशको मूल अर्थ हो पूर्व तथा पश्चातको परिणामलाई याद दिलाउनु, चाहे भयद्वारा होस् अथवा प्रलोभनद्वारा । तथा वक्ताको तुलना चिकित्सकको जस्तो छ जो रोगीलाई ती सबै कुराबाट रोक्दछ, जुन उसको शरीर तथा स्वास्थ्यको लागि हानिकारक छ । त्यसैप्रकार कुर्आन पनि प्रलोभन दिएर तथा भय उत्पन्न गराएर शिक्षा तथा उपदेश दिन्छ तथा ती परिणामहरूबाट सावधान गर्दछ जसको अल्लाहको अवज्ञाको परिस्थितिमा सामना गर्नुपर्नेछ तथा ती कार्यहरूबाट रोक्दछ जसबाट मनुष्यको परलोकको जीवन नष्ट हुनसक्छ ।

فِي الصُّدُورِ ۙ وَهُدًى وَرَحْمَةٌ لِّلْمُؤْمِنِينَ ﴿٥٧﴾

निवारण हो ।[१] तथा मार्गदर्शन दिने हो तथा कृपा हो ईमान भएकाहरूका लागि ।[२]

قُلْ بِفَضْلِ اللَّهِ وَبِرَحْمَتِهِ فَبِذَٰلِكَ فَلْيَفْرَحُوا هُوَ خَيْرٌ مِّمَّا يَجْمَعُونَ ﴿٥٨﴾

(५८) (तपाईं) भनिदिनुस् कि मानिसहरू अल्लाहको उपहार तथा कृपामा प्रसन्न हुनुपर्छ ।[३] त्यो त्यसभन्दा धेरै उत्तम छ, जसलाई उनीहरू एकत्रित गरिराखेका छन् ।

قُلْ أَرَأَيْتُم مَّا أَنزَلَ اللَّهُ لَكُم مِّن رِّزْقٍ فَجَعَلْتُم مِّنْهُ حَرَامًا وَحَلَالًا قُلْ آللَّهُ أَذِنَ

(५९) (तपाईं) भन्नुहोस् कि यो त भन कि अल्लाहले तिम्रो लागि जुन जीविका पठाएको थियो, पछि तिमीले त्यसको केही भाग हराम (अवैध) केही हलाल (बैध) गरिहाल्यौ ।[४] (तपाईं) सोध्नुस् कि के

[१]अर्थात् हृदयहरूमा एकेश्वरवाद (तौहीद) तथा ऋषित्व (रिसालत) एवं सत्य विश्वासको विषयमा जुन सन्देह तथा शंका उत्पन्न हुन्छ, तिनका निवारण तथा अविश्वास एवं द्वेयवादको अपवित्रता तथा दोषलाई स्वच्छ गर्दछ ।

[२]यो कुरआन ईमानहरूका लागि मार्गदर्शन तथा कृपाको साधन हो, त यो कुरआन अखिल मानव जगतका लागि मार्गदर्शन तथा कृपाको साधन हो तर त्यसबाट लाभान्वित मात्र निष्ठावानहरू हुन्छन्, यसकारण यहाँ उनैका लागि केवल मार्गदर्शन एवं कृपाको साधन भनिएको छ । यस विषयलाई कुरआन करीममा सूरः बनी इस्राईल आयत संख्या ८२ तथा सूरः अलिफ. लाम. मीम. सज्दः आयत संख्या ४४ मा पनि वर्णन गरिएको छ । (यसको अतिरिक्त هُدىً للمتقين को ब्याख्या हेर्नुस् ।

[३]खुशी त्यस अवस्थाको नाम हो जुन कुनै प्रिय वस्तुको प्राप्तिमा मनुष्य आफ्नो हृदयमा संवेदन गर्दछ । ईमान भएकाहरूसित भनिँदैछ कि यो कुरआन अल्लाहको विशेष कृपा तथा त्यसको दया हो, यसमा ईमान निष्ठावानहरू प्रसन्न हुनुपर्छ अर्थात् उनका हृदयमा हर्ष तथा आनन्द हुनुपर्छ । त्यसको अर्थ यो होइन कि प्रसन्नता व्यक्त गर्नको लागि सभा तथा जुलुसहरू, दीप बाल्नु तथा यसैप्रकारका अन्य निरर्थक तथा अपव्ययका काम गर । जस्तो कि आजकलका धार्मिक आधुनिकीकरण गर्नेहरू यस आयतबाट 'जश्ने ईद मीलाद' तथा यसको कुरीतिको औचित्य सिद्ध गर्दछन् ।

[४]यसबाट तात्पर्य त्यही केही पशुहरूलाई हराम गर्नु हो जो मूर्तिपूजक आफ्ना मूर्तिहरूको नामबाट छाडिदिने गर्दथे, जसको विस्तृत वर्णन सूरः अल-अन्आममा भैसकेको छ ।

لَكُمْ اَمْ عَلَى اللّٰهِ تَفْتَرُوْنَ ﴿٥٩﴾

तिमीलाई अल्लाहले आदेश दिएको थियो अथवा अल्लाहमाथि झूट कुरा रच्दछौ ?

وَمَا ظَنُّ الَّذِيْنَ يَفْتَرُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ يَوْمَ الْقِيٰمَةِ ؕ اِنَّ اللّٰهَ لَذُوْ فَضْلٍ عَلَى النَّاسِ وَلٰكِنَّ اَكْثَرَهُمْ لَا يَشْكُرُوْنَ ﴿٦٠﴾

(६०) तथा जो मानिसहरू अल्लाहमाथि झूटा कुरा पढ्दछन्, उनको क़ेयामत (प्रलय) को विषयमा के विचार छ ?[१] वास्तवमा मानिसहरूमाथि अल्लाह तआ़लाको ठूलै उपकार छ।[२] तर अधिकतर मानिसहरू कृतज्ञता व्यक्त गर्दैनन्।[३]

وَمَا تَكُوْنُ فِيْ شَاْنٍ وَّمَا تَتْلُوْا مِنْهُ مِنْ قُرْاٰنٍ وَّلَا تَعْمَلُوْنَ مِنْ عَمَلٍ اِلَّا كُنَّا عَلَيْكُمْ شُهُوْدًا اِذْ تُفِيْضُوْنَ فِيْهِ ؕ وَمَا يَعْزُبُ عَنْ رَّبِّكَ مِنْ مِّثْقَالِ ذَرَّةٍ فِي الْاَرْضِ وَلَا فِي السَّمَآءِ وَلَآ اَصْغَرَ مِنْ ذٰلِكَ وَلَآ اَكْبَرَ اِلَّا فِيْ كِتٰبٍ مُّبِيْنٍ ﴿٦١﴾

(६१) तथा तपाईं जुन पनि अवस्थामा रहनुहुन्छ तथा क़ुर्आनबाट जे-जति पनि पढ्नु हुन्छ र तिमीहरू जुन पनि काम गर्दछौ, हामीले तिमीलाई देखिराखेका हुन्छौं, जब तिमी त्यसमा लीन हुन्छौ तथा तपाईंको प्रभुबाट कुनै कुरा कण बराबर लुप्त रहँदैन, न धर्तीमा न आकाशमा तथा न त्यसभन्दा सानो र न ठूलो, परन्तु यो सबै स्पष्ट किताबमा छ।[४]

[१]अर्थात क़ेयामतका दिन अल्लाह तआ़ला उनीहरूसित के व्यवहार गर्नेछन्।

[२]कि त्यसले मनुष्यहरूको संसारमा तुरून्त पकड गर्दैन परन्तु त्यसको लागि एउटा दिन निर्धारित गरेको छ। अर्थ यो हो कि त्यो संसारको सुख मुसलमान तथा काफ़िरलाई अन्तर नगरीकन दिन्छ। अथवा जुन कुरा मनुष्यहरूका लाभकारी तथा आवश्यक छन्, तिनीहरूलाई उचित तथा वैध वनाएको छ, तिनीहरूलाई हराम (अवैध) गरेको छैन।

[३]अल्लाहद्वारा प्रदान गरिएका सुखहरूको लागि कृतज्ञता व्यक्त गर्दैनन् अथवा त्यसको हलाल गरिएका कुराहरूलाई हराम गर्दछन्।

[४]यस आयतमा अल्लाह तआ़लाले नबी सल्लल्लाहु अलैहि वसल्लम तथा ईमानवालाहरूलाई सम्वोधित गर्दै भन्यो कि त्यो सारा सृष्टिको अवस्थासित परिचित छ तथा प्रत्येक क्षण मनुष्यहरूमाथि उसको दृष्टि छ। धर्ती एवं आकाशको कुनै वस्तु त्यसबाट लुकेको छैन, यो त्यही विषय हो जुन सूर: अल-अन्आम आयत संख्या ५९ मा चर्चित भइसकेको छ "उसैको पासमा परोक्षको कोष छन्, जसलाई त्यही नै जान्दछ। त्यसलाई वन तथा जलका सबै वस्तुहरुको ज्ञान छ, तथा

(६२) याद राख कि अल्लाहका मित्रहरूलाई[1] न कुनै भय छ न उनी दुखी हुनेछन् ।[2]

أَلَآ إِنَّ أَوْلِيَآءَ ٱللَّهِ لَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ۝٦٢

कुनै पात झर्दा पनि उसलाई थाहा हुन्छ, तथा धर्तीका अधरहरूमा कुनै दाना तथा कुनै हरियो एवं सुखेको वस्तु छैन, परन्तु 'किताबे मोबीन' मा लेखिएको छ ।" त्यसैप्रकार सूरः अल-अनआमको आयत संख्या ३८ तथा सूरः हूदको आयत संख्या ६ मा पनि यस विषयको वर्णन गरिएको छ । जब वास्तविकता यो छ कि त्यो आकाश तथा धर्तीमा उपस्थित वस्तुहरूको गतिलाई जान्दछ, त त्यो मनुष्य तथा जिन्नहरूको गति तथा कर्महरूबाट किन अनभिज्ञ रहन सक्दछ, जो अल्लाहका उपासना गर्नको लागि बनाइए तथा पठाइएका छन् ?

[1]अवज्ञाकारीहरूका पश्चात अल्लाह तआला आफ्ना आज्ञाकारीहरूको चर्चा गर्दैछ तथा उनी हुन् औलिया अल्लाह (अल्लाहका मित्र) । 'औलिया' बहुवचन हो 'वली' शब्दको जसको शाब्दिक अर्थ 'निकटवर्ती' हो । यस आधारमा 'औलिया अल्लाह' को अर्थ हुनेछ ती साँचा तथा निःस्वार्थ ईमान भएका जसले अल्लाहको आज्ञापालन गरी तथा निषेधित कार्यहरूबाट बचेर अल्लाहको निकटता प्राप्त गरे । यसैकारण अल्लाह तआलाले स्वयं आगामी आयतमा उनको प्रशंसा यी शब्दहरूमा गरेको छ, "जो ईमान कायम गरे तथा जसले अल्लाहको भय हृदयमा राखे ।" तथा ईमान एवं अल्लाहको भय नै अल्लाहको निकटता प्राप्त गर्नुको आधार तथा प्रमुख साधन हो । यस आधारमा अल्लाहको भय राख्ने प्रत्येक ईमान्दार अल्लाहको वली हो । मानिसहरू वली हुनको लागि चमत्कार देखाउन आवश्यक ठान्दछन् तथा पछि उनी आफूले बनाएका वलीहरूका झूटा-साँचा चमत्कारहरूको प्रचार गर्दछन्, यो विचार पूर्णतः दोषपूर्ण छ । चमत्कार तथा वलीको न निकटको सम्बन्ध छ न यसको लागि आवश्यक प्रतिबन्ध । यो बेग्लै कुरा हो कि कसैबाट चमत्कार प्रदर्शित हुन्छ भने अल्लाहको इच्छा हो, यसमा त्यस महात्माको इच्छा सम्मिलित छैन । परन्तु कुनै अल्लाहसित भय गर्ने मोमिन तथा सुन्नतको पालना गर्नेबाट चमत्कारको प्रदर्शन हुन्छ अथवा हुँदैन त्यसको वली हुने कुरोमा कुनै सन्देह छैन ।

[2]भयको सम्बन्ध भविष्यसित छ तथा दुखको भूतकालसित । अर्थ यो हो कि जीवन अल्लाहको भयमा व्यतीत गरिएको हुन्छ । यसकारण कयामतको भयानकताको भय यति उनीहरूलाई हुनेछैन जसरी अरूलाई हुनेछ । बरू उनीहरू आफ्नो ईमान तथा अल्लाहको भयका कारण अल्लाहको दया तथा विशेष कृपाका अभिलाषी तथा त्योसँग राम्रो विचार राख्नेवाला छन् । यसैप्रकार संसारमा उनीहरू जे-जति छाडेर गएका हुन्छन् अथवा संसारको स्वाद उनीहरूलाई भएका हुने छैनन् होला, त्यसमाथि उनीहरूलाई कुनै दुख हुनेछैन । एक अन्य अर्थ यो पनि हो कि संसारमा जे इच्छित वस्तु उनीहरूलाई प्राप्त हुँदैन त्यसमाथि उनीहरू दुखको प्रदर्शन

ٱلَّذِينَ ءَامَنُوا۟ وَكَانُوا۟ يَتَّقُونَ ﴿٦٣﴾

(६३) यी यस्ता मानिसहरू हुन्, जसले ईमान स्थापित गरे तथा (पापबाट) संयम गर्दछन् ।

لَهُمُ ٱلْبُشْرَىٰ فِى ٱلْحَيَوٰةِ ٱلدُّنْيَا وَفِى ٱلْـَٔاخِرَةِ ۚ لَا تَبْدِيلَ لِكَلِمَـٰتِ ٱللَّهِ ۚ ذَٰلِكَ هُوَ ٱلْفَوْزُ ٱلْعَظِيمُ ﴿٦٤﴾

(६४) उनीहरूका लागि सांसारिक जीवनमा पनि[1] तथा परलोकमा पनि शुभ-सूचना छ, अल्लाह तआ़लाका कुरामा कुनै परिवर्तन हुने गर्दैन । यो ठूलो सफलता हो ।

وَلَا يَحْزُنكَ قَوْلُهُمْ ۘ إِنَّ ٱلْعِزَّةَ لِلَّهِ جَمِيعًا ۚ هُوَ ٱلسَّمِيعُ ٱلْعَلِيمُ ﴿٦٥﴾

(६५) तथा तपाईंलाई उनका कुराले दुःखमा नपारून्, सार्वभौमिक प्रभुत्व अल्लाहकै लागि छ, त्यो सर्वश्रोता, सर्वज्ञाता छ ।

أَلَآ إِنَّ لِلَّهِ مَن فِى ٱلسَّمَـٰوَٰتِ وَمَن فِى ٱلْأَرْضِ ۗ وَمَا يَتَّبِعُ ٱلَّذِينَ يَدْعُونَ مِن دُونِ ٱللَّهِ شُرَكَآءَ ۚ إِن يَتَّبِعُونَ إِلَّا ٱلظَّنَّ وَإِنْ هُمْ إِلَّا يَخْرُصُونَ ﴿٦٦﴾

(६६) याद राख कि जे-जति आकाशहरूमा छन् तथा जति धर्तीमा छन्, यी सबै अल्लाहकै हुन् तथा जो अल्लाहलाई छाडेर अन्य साझेदारहरूलाई पुकार्दछन्, कुन कुराको पालन गरिराखेका छन् ? मात्र कल्पित विचारहरूको पालना गरिराखेका छन् तथा मात्र अनुमानित कुराहरू गरिराखेका छन् ।[2]

---

गर्दैनन् किनभने उनीहरू जान्दछन् कि यो सबै अल्लाहको निर्णय एवं भाग्यको देन हो, जसबाट उनका हृदयहरूमा दुख तथा फोहोर उत्पन्न हुँदैन, बरू उनका हृदय अल्लाहको निर्णयमा प्रसन्न तथा शान्त रहन्छन् ।

[1]संसारमा शुभ-सूचनाबाट तात्पर्य पुण्यको कार्य हो अथवा त्यो सूचना जुन मृत्युको समय फरिश्ताहरू निष्ठावानहरूलाई दिन्छन्, जस्तो कि कुरआन तथा हदीसबाट सिद्ध छ ।

[2]अर्थात् अल्लाहसँग कसैलाई साझेदार ठहराउन कुनै तर्कको आधारमा छैन, बरू एउटा वैचारिक मन्थन तथा कल्पना एवं अनुमानको देन हो । आज यदि मनुष्य आफ्नो बुद्धि तथा विवेकलाई उचितरूपले प्रयोग गर्दछ भने निःसन्देह त्यसमाथि यो स्पष्ट हुनसक्दछ कि अल्लाहको कोही साझेदार छैन, त उपासनामा अन्य उसको साझेदार कसरी हुन सक्दछन् ?

هُوَ الَّذِيْ جَعَلَ لَكُمُ الَّيْلَ لِتَسْكُنُوْا فِيْهِ وَالنَّهَارَ مُبْصِرًا ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّسْمَعُوْنَ ﴿٦٧﴾

(६७) त्यो (अल्लाह) यस्तो छ जसले तिम्रो लागि रात बनायो ताकि तिमी त्यसमा विश्राम गर तथा दिन पनि यस किसिमले बनायो कि देखभाल गर्नको लागि साधन छ, वस्तुत: यसमा निशानीहरू (लक्षणहरू) छन्, ती मानिसहरूका लागि जो सुन्दछन् ।

قَالُوا اتَّخَذَ اللّٰهُ وَلَدًا سُبْحٰنَهٗ ؕ هُوَ الْغَنِيُّ ؕ لَهٗ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ؕ اِنْ عِنْدَكُمْ مِّنْ سُلْطٰنٍۭ بِهٰذَا ؕ اَتَقُوْلُوْنَ عَلَى اللّٰهِ مَا لَا تَعْلَمُوْنَ ﴿٦٨﴾

(६८) उनी भन्दछन् कि अल्लाहका सन्तान छन् । त्यो यसबाट पवित्र छ, त्यो त कसैको आश्रित छैन ।[1] उसैको स्वामित्व छ, जे-जति आकाशहरूमा छ तथा जे-जति धर्तीमा छ ।[2] तिम्रो पासमा यसबारे कुनै प्रमाण छैन । के अल्लाहसित सम्बन्धित यस्ता कुरा भन्छौ जसको तिमीलाई ज्ञान छैन ?

[1]तथा जो सबभन्दा निस्पृह छ, उसलाई सन्तानको पनि आवश्यकता छैन । किनभने सन्तान त सहाराको लागि हुन्छ तथा जब उसलाई सहाराको आवश्यकता छैन त उसलाई सन्तानको के आवश्यकता ?

[2]जब आकाश तथा धर्तीको प्रत्येक वस्तु उसैको हो त प्रत्येक उसका पराधीन एवं दास भए । अनि उसलाई सन्तानको के आवश्यकता हुन्छ सन्तानको आवश्यकता त्यसलाई हुन्छ, जसलाई केही सहायता तथा सहाराको आवश्यकता हुन्छ । तथा जसको आदेश आकाश तथा धर्तीको प्रत्येक वस्तुमा चल्छ, त्यसलाई के आवश्यकता उत्पन्न हुनसक्छ र ? यसका अतिरिक्त सन्तानको आवश्यकताको रुचि त्यसलाई हुन्छ, जो आफु पश्चात आफ्नो स्वामित्वको उत्तराधिकारी बनाउन चाहन्छ तथा अल्लाह तआ़ला त अनन्त छ । यसकारण अल्लाहको लागि सन्तान ठहराउनु यति ठूलो अपराध हो कि अल्लाह तआ़ला भन्छ :

﴿تَكَادُ السَّمٰوٰتُ يَتَفَطَّرْنَ مِنْهُ وَتَنْشَقُّ الْاَرْضُ وَتَخِرُّ الْجِبَالُ هَدًّا ۝ اَنْ دَعَوْا لِلرَّحْمٰنِ وَلَدًا﴾

"यस कुराबाट कि उनीहरू भन्दछन् अल्लाहको सन्तान छ, निकट छ कि आकाश फाटेर जाओस्, धर्तीमा चिरा परोस् तथा पर्वत कण-कण भएर जाओस् ।" (सूर: मरियम-९०, ९१)

قُلْ إِنَّ الَّذِينَ يَفْتَرُونَ عَلَى اللَّهِ الْكَذِبَ لَا يُفْلِحُونَ ﴿٦٩﴾

(६९) (तपाईं) भनिदिनुस् कि जो अल्लाहमाथि मित्थ्यारोपण गर्दछन्,[१] उनीहरू सफल हुने छैनन् ।[२]

مَتَاعٌ فِي الدُّنْيَا ثُمَّ إِلَيْنَا مَرْجِعُهُمْ ثُمَّ نُذِيقُهُمُ الْعَذَابَ الشَّدِيدَ بِمَا كَانُوا يَكْفُرُونَ ﴿٧٠﴾

(७०) (यो) संसारमा अलिकति सुख छ अनि हाम्रो पासमा उनीहरू आउनु पर्नेछ, त्यसपछि हामीले उनलाई उनका कुफ्र (अविश्वास) को फल कठोर दण्ड चखाउनेछौं ।

وَاتْلُ عَلَيْهِمْ نَبَأَ نُوحٍ إِذْ قَالَ لِقَوْمِهِ يَا قَوْمِ إِنْ كَانَ كَبُرَ عَلَيْكُمْ مَقَامِي وَتَذْكِيرِي بِآيَاتِ اللَّهِ فَعَلَى اللَّهِ تَوَكَّلْتُ فَأَجْمِعُوا أَمْرَكُمْ وَشُرَكَاءَكُمْ ثُمَّ لَا يَكُنْ أَمْرُكُمْ

(७१) तथा तपाईं उनलाई नूहको कथा पढेर सुनाउनुहोस् जबकि उनले आफ्नो समुदायसित भने कि हे मेरो समुदायका मानिसहरू यदि तिमीलाई मेरो रहनु तथा अल्लाहका आदेशहरूको शिक्षा दिनु कठिन लाग्दछ भने मेरो त अल्लाहमाथि नै भरोसा छ । तिमी आफ्ना योजना आफ्ना साथीहरुसँग

[१](افتراء) (इफ़्तरा) को अर्थ हो असत्य कुरा भन्नु तथा आरोप लगाउनु । अनि उसलाई भ्रूटो भन्नु जोड दिनको लागि हो ।

[२]यसबाट स्पष्ट छ कि सफलतासित तात्पर्य परलोकको सफलता अर्थात् अल्लाहको क्रोध तथा उसको यातनाबाट वच्नु हो । मात्र संसारको अस्थाई सुख सफलता होइन । जस्तो कि धेरैजसो मानिस अधर्मीहरूको अस्थाई सुख-सुविधाबाट त्रुटि तथा शंका एवं सन्देहमा पर्न जान्छन् । यसकारण अघिल्लो आयतमा आदेश भयो : "यिनीहरू संसारमा अलिकति सुखको भोग गरिहालून् अनि अन्तमा हाम्रो पासमा आउनु छ ।" अर्थात् यो संसारको सुख परलोकको सुखहरूका अपेक्षा अत्यन्त तुक्ष छ । यस पश्चात उनीहरूले अत्यन्त कठोर यातना भोग्नु पर्नेछ । यसकारण यस कुरोलाई राम्ररी बुझ्नु पर्छ कि काफ़िर मूर्तिपूजक तथा अल्लाहका अवज्ञाकारीहरूको सांसारिक सुख तथा वैभव यस कुराको प्रमाण होइन कि यी समुदाय सफल छन् तथा अल्लाह तआ़ला उनीसित प्रसन्न छ, यी भौतिक सफलताहरू उनका निरन्तर प्रयत्नहरूका परिणाम हुन्, जुन प्रत्यक्ष कारणहरूका अनुसार प्रत्येक समुदायलाई प्राप्त हुनसक्दछ, जो साधनहरूलाई व्यवहारमा ल्याउँदै त्यसैप्रकार परिश्रम गर्नेछन्, चाहे तिनी ईमान भएका हुन् वा काफ़िर । यसका अतिरिक्त यी अस्थायी सफलताहरू अल्लाहद्वारा निर्धारित नियम तथा अवसर प्रदान गर्नुका परिणाम पनि हुनसक्छन्, जसको स्पष्टीकरण हामी यसभन्दा पूर्व कैयन् स्थानहरूमा गरिसकेका छौं ।

عَلَيْكُمْ غُمَّةً ثُمَّ اقْضُوٓا إِلَيَّ وَلَا تُنظِرُونِ ﴿٧١﴾

सुदृढ गर ।[1] योजना तिम्रो लागि घटनाको कारण नहोस्[2] आफूले ठहराएका सँगै साझीदारहरूलाई पनि राख । अनि तिम्रो मामिला तिमीमाथि संदिग्ध नरहोस्[2], त्यसपश्चात म सित जे गर्नु छ, गरिहाल र मलाई मोहलत नदेऊ ।

فَإِن تَوَلَّيْتُمْ فَمَا سَأَلْتُكُم مِّنْ أَجْرٍ ۖ إِنْ أَجْرِيَ إِلَّا عَلَى اللَّهِ ۖ وَأُمِرْتُ أَنْ أَكُونَ مِنَ الْمُسْلِمِينَ ﴿٧٢﴾

(७२) तैपनि यदि तिमी मुख फर्काउँछौ भने मैले तिमीसित कुनै प्रतिफल त माँगिन,[3] मेरो प्रतिफल त मात्र अल्लाहले नै दिनेछ तथा मलाई आदेश दिएको छ कि म मुसलमानहरू मध्येबाट नै रहूँ ।[4]

فَكَذَّبُوهُ فَنَجَّيْنَاهُ وَمَن مَّعَهُ فِي الْفُلْكِ وَجَعَلْنَاهُمْ خَلَائِفَ وَأَغْرَقْنَا

(७३) त तिनीहरू उनलाई झुट्लाए, अनि हामीले उनलाई तथा जो उनका साथ डुङ्गामा सवार थिए, उनलाई मुक्ति प्रदान गर्‍यौं तथा उनलाई

[1]अर्थात् जसलाई तिमीले अल्लाहको साझेदार बनाएका छौ, उनीहरूको सहायता पनि प्राप्त गर । (यदि उनीहरू तिम्रा विचार अनुसार तिम्रो सहायता गर्न सक्छन्)

[2](غُمَّةً) को अन्य अर्थ हो, अस्पष्ट तथा लुकेको हुनु । अर्थात् मेरो विरूद्ध तिम्रो प्रयत्न स्पष्ट तथा सफा हुनुपर्छ ।

[3]कि जसको कारण तिमी यो आरोप लगाउन सक कि नबूवतको दावीसित उसको उद्देश्य धन-सम्पत्ति एकत्रित गर्नु हो ।

[4]आदरणीय नूहको यस कथनबाट पनि ज्ञात भयो कि सबै नबीहरूको धर्म इस्लाम नै रहिआएको छ । यद्यपि धार्मिक नियम भिन्न-भिन्न तथा विधिहरू उनका बेग्लै रहेका थिए । जस्तो कि आयत सूरः अल-मायदः, ४८ बाट स्पष्ट छ । ﴿لِكُلٍّ جَعَلْنَا مِنكُمْ شِرْعَةً وَمِنْهَاجًا﴾ (المائدة: ٤٨) परन्तु धर्म सबैको इस्लाम थियो, हेर्नुस् सूरः अल-बकरः-१३१ तथा १३२, सूरः यूसुफ-१०१, सूरः अन्नमल-९१, सूरः यूनुस-८४, सूरः अल-आराफ-१२६, सूरः नम्ल-४४, सूरः अल-मायदः-४४, १११ एवं सूरः अल-अनआम-१६२ तथा १६३ ।

[5]अर्थात् नूहका समुदायका मानिसहरूले सबैप्रकारको शिक्षा एवं उपदेशका उपरान्त पनि झुट्लाउने मार्ग छोडेनन्, अतः अल्लाह तआलाले आदरणीय नूह तथा उनमा विश्वास गर्नेहरूलाई एउटा डुङ्गामा सवार गराएर बचायो तथा शेष सबैलाई, यहाँसम्मकि आदरणीय नूहको एउटा पुत्रलाई पनि डुबाइदियो ।

ٱلَّذِينَ كَذَّبُوا۟ بِـَٔايَٰتِنَا ۖ فَٱنظُرْ كَيْفَ كَانَ عَٰقِبَةُ ٱلْمُنذَرِينَ ﴿٧٣﴾

सचेत गरिएको थियो, उनीहरूको परिणाम के भयो ?

ثُمَّ بَعَثْنَا مِنۢ بَعْدِهِۦ رُسُلًا إِلَىٰ قَوْمِهِمْ فَجَآءُوهُم بِٱلْبَيِّنَٰتِ فَمَا كَانُوا۟ لِيُؤْمِنُوا۟ بِمَا كَذَّبُوا۟ بِهِۦ مِن قَبْلُ ۚ كَذَٰلِكَ نَطْبَعُ عَلَىٰ قُلُوبِ ٱلْمُعْتَدِينَ ﴿٧٤﴾

(७४) अनि उनका (नूह) पश्चात हामीले अन्य रसूलहरूलाई उनको समुदायतिर पठायौं, त उनी उनको पासमा स्पष्ट प्रमाण लिएर आए ।[२] तर जुन कुरोलाई उनीहरूले प्रथम समयमा झूटा भनिदिए, पुनः त्यसमाथि ईमान स्थापित गर्न सकेनन् ।[३] हामी यसैप्रकार सीमा उल्लघंन गर्नेहरूका हृदयमा मुहर (छाप) लगाइदिन्छौं ।[४]

---

[१]अर्थात् धर्तीमा ती बाँच्नेहरूलाई पूर्वका मानिसहरूको उत्तराधिकारी बनायौं । अनि मनुष्यहरूका आगामी वंश तिनै मानिसहरू विशेषरूपले आदरणीय नूहका तीन पुत्रहरूबाट चल्यो, यसैकारण आदरणीय नूहलाई दोस्रो आदम (द्वितीय मनु) भनिन्छ ।

[२]अर्थात् यस्ता लक्षण तथा चमत्कार लिएर आए जुन यस कुरालाई प्रमाणित गर्दथे कि वास्तवमा यिनी अल्लाहका सच्चा रसूल हुन्, जसलाई अल्लाहले मार्गदर्शन तथा निर्देश दिनको निम्ति पठाएको छ ।

[३]तर यी समुदायहरूले रसूलहरूका कुरा मानेनन्, मात्र यसकारण कि जब प्रथम यी रसूल उनको पासमा आए त तुरुन्त बिना कुनै विचार-विमर्श गरी उनलाई नकारि दिए, यो पहिलो पटकको इन्कार उनको लागि थाई आवरण बन्न पुग्यो । तथा उनीहरू यही नै सोच्दै रहे कि हामी त पहिले नकारिसकेका छौं, अब यसलाई किन स्वीकार्ने ! परिणाम स्वरूप ईमानबाट बञ्चित रहे ।

[४]अर्थात् जुनप्रकार यी पूर्वका समुदायहरूमाथि उनका अविश्वास तथा झुट्लाउनुका कारण मोहर लाग्दै रहेका छन्, त्यसैप्रकार भविष्यमा पनि जुन समुदाय रसूलहरूलाई झुठ्लाउनेछ तथा अल्लाहका निशानीहरूलाई झुठ्लाउने मार्ग अपनाउने छ, उनका हृदयहरूमा पनि सील (मोहर) लागिरहने छन् तथा उनीहरू संमार्गबाट त्यसैप्रकार बञ्चित रहने छन जुनप्रकार पूर्वका समुदाय बञ्चित रहे ।

(७५) त्यसपछि हामीले ती (पैग़म्बरहरू) का पश्चात मुसा तथा हारूनलाई फ़िरऔन[1] तथा त्यसका प्रमुखहरूका पासमा आफ्नो चमत्कार दिएर पठायौ ।[2] त उनीहरूले अभिमान गरे तथा उनीहरू अपराधी समुदाय थिए ।[3]

ثُمَّ بَعَثْنَا مِنْ بَعْدِهِمْ مُوسَىٰ وَهَارُونَ إِلَىٰ فِرْعَوْنَ وَمَلَئِهِ بِآيَاتِنَا فَاسْتَكْبَرُوا وَكَانُوا قَوْمًا مُجْرِمِينَ ﴿٧٥﴾

(७६) अनि जब उनीहरूलाई हाम्रो तर्फबाट सत्य (प्रमाण) पुग्यो त उनीहरू भन्नथाले कि निःसन्देह यो खुल्ला रुपमा जादू हो ।[4]

فَلَمَّا جَاءَهُمُ الْحَقُّ مِنْ عِنْدِنَا قَالُوا إِنَّ هَٰذَا لَسِحْرٌ مُبِينٌ ﴿٧٦﴾

(७७) मूसाले भने कि के तिमी यस सत्यको सम्बन्धमा, जबकि त्यो तिम्रो पासमा आइसकेको छ, यस्ता कुरा भन्दछौ, के यो जादू हो, र जादूगर सफल हुँदैनन् ?[5]

قَالَ مُوسَىٰ أَتَقُولُونَ لِلْحَقِّ لَمَّا جَاءَكُمْ ۖ أَسِحْرٌ هَٰذَا وَلَا يُفْلِحُ السَّاحِرُونَ ﴿٧٧﴾

[1] रसूलहरूको सामान्य वर्णन गर्नुका पश्चात आदरणीय मूसा तथा हारूनको वर्णन गरिदैछ, यद्यपि रसूलहरूमध्ये उनी पनि आउँछन्, तर उनको गणना गणमान्य रसूलहरूमा हुन्छ, यसकारण विशेषरूपले उनको अलग्गै वर्णन गर्‍यौं ।

[2] आदरणीय मूसाका यी चमत्कार विशेषरूपले नवदिव्य निशानीहरू जसको वर्णन अल्लाहले सूरः बनी इस्राईल आयत १०१ मा गरेको छ, प्रसिद्ध छन् ।

[3] अर्थात् उनीहरू ठूला-ठूला अपराध तथा पापहरूमा लीन थिए । यसकारण उनीहरूले अल्लाहद्वारा पठाइएका रसूलहरूलाई पनि झुट्लाए किनभने एउटा पाप अर्को पापको माध्यम बन्छ तथा पापहरू निरन्तर गर्दै जानु ठूला-ठूला पापहरूलाई गर्नुको दुस्साहस उत्पन्न गरिदिन्छ ।

[4] जब अस्वीकार गर्नको लागि उचित तर्क तथा प्रमाण पाइदैन, तब त्यसबाट छुटकारा प्राप्त गर्नको लागि भन्छन् कि यो जादू हो ।

[5] आदरणीय मूसाले भने कि अलिकति विचार त गर । सत्यको आमन्त्रण तथा उचित कुरोलाई तिमीहरू जादू भन्दछौ, साँच्चिकै के यो जादू हो त ? जादूगर त सफल हुँदैनन् । अर्थात् इच्छित उद्देश्य प्राप्त गर्न तथा अप्रिय परिणामबाट बच्नुमा उनीहरू असफल नै रहन्छन् । तथा म त अल्लाहको रसूल हूँ, मलाई अल्लाहको सहायता प्राप्त छ तथा उसको तर्फबाट मलाई चमत्कार दिव्य निशानीहरू प्रदान गरिएका छन्, मलाई जादू तथा जादूगरीको के आवश्यकता छ र ?

قَالُوْٓا اَجِئْتَنَا لِتَلْفِتَنَا عَمَّا وَجَدْنَا عَلَيْهِ اٰبَآءَنَا وَتَكُوْنَ لَكُمَا الْكِبْرِيَآءُ فِي الْاَرْضِ ؕ وَمَا نَحْنُ لَكُمَا بِمُؤْمِنِيْنَ ﴿٧٨﴾

(७८) उनीहरू भन्नथाले कि तिमी हाम्रो पासमा यसकारण आएका हौ कि हामीलाई त्यस मार्गबाट हटाइदेउ, जसमा हामीले आफ्ना पूर्वजहरूलाई पाएका छौं, तथा तिमी दुबैलाई संसारमा महानता प्राप्त होस्,[1] तथा हामी तिमी दुबैलाई कहिल्यै मान्ने छैनौं ।

وَقَالَ فِرْعَوْنُ ائْتُوْنِيْ بِكُلِّ سٰحِرٍ عَلِيْمٍ ﴿٧٩﴾

(७९) तथा फ़िरऔनले भन्यो कि मेरो पासमा सबै दक्ष जादूगरहरूलाई ल्याऊ ।

فَلَمَّا جَآءَ السَّحَرَةُ قَالَ لَهُمْ مُّوْسٰٓى اَلْقُوْا مَآ اَنْتُمْ مُّلْقُوْنَ ﴿٨٠﴾

(८०) अनि जब जादूगर आए त मूसाले उनीसित भने कि (जादू) हान जे-जति तिमी हान्न चाहन्छौ ।

فَلَمَّآ اَلْقَوْا قَالَ مُوْسٰى مَا جِئْتُمْ بِهِ ۙ السِّحْرُ ؕ اِنَّ اللّٰهَ سَيُبْطِلُهٗ ؕ اِنَّ اللّٰهَ لَا يُصْلِحُ عَمَلَ الْمُفْسِدِيْنَ ﴿٨١﴾

(८१) त जब उनीहरूले हाने त मूसाले भने कि यो जे-जति तिमीले ल्याएका छौ जादू हो । यो निश्चित छ कि अल्लाहले यसलाई अहिले नष्ट गरिदिन्छ,[2] अल्लाह यस्ता भ्रष्टाचारीहरूको कार्य

तथा अल्लाहद्वारा प्रदान गरिएका चमत्कारका समक्ष यसको के स्थान छ र ?

[1]यो नमान्नेहरूका अन्य कुतर्क हुन्, जो तर्कवाट विवश भई प्रस्तुत गर्दछन् । एउटा यो कि तिमी हामीलाई हाम्रा पूर्वजहरूको मार्गबाट हटाउन चाहन्छौ, दोस्रो यो कि हामीलाई मान-मर्यादा तथा राज्य प्राप्त छ, त्यसलाई खोसेर स्वयं अधिकार गर्न चाहन्छ । यसकारण हामी त कहिल्यै पनि तिमीमाथि विश्वास गर्ने छैनौं । अर्थात् पूर्वजहरूको अनुकरण तथा सांसारिक राज्य एवं मान-मर्यादाले उनीहरूलाई विश्वास गर्नवाट रोकिराख्यौं । त्यस पश्चात अगाडि त्यही कथा छ कि फ़िरऔनले दक्ष जादूगरहरूलाई वोलायो तथा आदरणीय मूसा एवं जादूगरहरूको प्रतिस्पर्धा भयो, जस्तो कि सूरः आराफमा चर्चा भयो तथा सूरः ताहामा पनि यसको केही विवरण आउनेछ ।

[2]अतः यस्तै भयो । कहीं असत्य पनि सत्यको अगाडी सफल हुनसक्छ ? जादूगरहरूले चाहे उनी आफ्नो कलामा जति दक्ष भएपनि, जे-जति प्रस्तुत गरे, त्यो जादू नै थियो तथा नजरबन्दीको कला नै थियो तथा जव आदरणीय मूसाले अल्लाहको आदेशमा लठ्ठी हान्नुभयो त त्यसले सारा जादूगरहरूको जादूगरीलाई एकैक्षणमा समाप्त गरिदियो ।

बन्न दिँदैन ।[1]

(८२) तथा अल्लाह तआला़ले सत्य प्रमाणलाई आफ्नो कथनानुसार स्पष्ट[2] गरिदिन्छ, चाहे अपराधीलाई जति नराम्रो किन नलागोस् ।

وَيُحِقُّ اللّٰهُ الْحَقَّ بِكَلِمٰتِهٖ وَلَوْ كَرِهَ الْمُجْرِمُوْنَ ﴿٨٢﴾

(८३) अनि मूसामाथि उनका समुदाय मध्येबाट केही मात्र नै ईमान (विश्वास) ल्याए[3] त्यो पनि फ़िरऔन तथा आफ्ना अधिकारीहरूसित तर्सेर कि कहीं उनीहरूलाई दुख न पुऱ्याओस्,[4] तथा वास्तवमा

فَمَآ اٰمَنَ لِمُوْسٰٓى اِلَّا ذُرِّيَّةٌ مِّنْ قَوْمِهٖ عَلٰى خَوْفٍ مِّنْ فِرْعَوْنَ وَمَلَا۟ىِٕهِمْ اَنْ يَّفْتِنَهُمْ ؕ وَاِنَّ فِرْعَوْنَ

[1]तथा यी जादूगर पनि भ्रष्ट थिए, जसले मात्र धन कमाउनको लागि यो कला सिकेका थिए तथा जादूको कला देखाएर मानिसहरूलाई मूर्ख वनाउँथे, अल्लाह तआ़ला उनका यी भ्रष्टाचारहरूलाई कसरी सुसज्जित वनाउन सक्दथ्यो ?

[2]अथवा कथनबाट तात्पर्य त्यो तर्क तथा युक्तिहरू हुन्, जुन अल्लाह तआ़ला आफ्ना किताबहरूमा अवतरित गर्दैरहेको छ, जुन पैग़म्बरहरूलाई उसले प्रदान गरेको थियो । अथवा ती चमत्कार हुन्, जुन अल्लाह तआ़लाको आदेशबाट नबीहरूका हातबाट प्रदर्शित भए अथवा अल्लाहको त्यो आदेश हो जुन शब्द (كُنْ) (कुन) द्वारा गर्दछ ।

[3](قومه) को अक्षर (ه) को सम्बन्धमा व्याख्याकारहरूमा मतभेद छ । केही ज्ञाताहरूले यसलाई आदरणीय मूसातिर संकेत गरेका छन् किनभने आयतमा सर्वनामभन्दा पूर्व उनैको नाम (वर्णन) आएको छ । अर्थात् मूसाको समुदायबाट थोरै मानिसहरूले विश्वास गरे । तर ईमाम इब्ने कसीर आदिले यसको संकेत फ़िरऔनतिर गर्नुभएको छ । अर्थात् फ़िरऔनको समुदायबाट केही मात्र मानिसहरू ईमान स्थापित गरे । उनको तर्क यो हो कि इस्राईलका सन्तानका मानिसहरू त एउटा रसूल तथा छुटकारा दिलाउनेको प्रतिक्षामा थिए जो आदरणीय मूसा अलैहिस्सलामको रुपमा उनीहरूलाई प्राप्त भए तथा यस आधारमा इस्राईलको वंश (कारून बाहेक) उनीमाथि ईमान राख्दथे । यसकारण उचित कुरो यो हो कि ﴿ذُرِّيَّةٌ مِّنْ قَوْمِهٖ﴾ सित तात्पर्य फ़िरऔनका समुदायबाट केही मानिसहरू हुन्, जो आदरणीय मूसामाथि ईमान कायम गरे । तिनै मध्येबाट उनकी पत्नी (आदरणीय) आसिया पनि हुन् ।

[4]कुरआन करीमको यो व्याख्या पनि यस कुराको द्योतक छ कि ईमान स्थापित गर्नेहरू थोरै मानिसहरू फ़िरऔनका समुदायबाट थिए, किनभने उनैलाई फ़िरऔन तथा त्यसका दरबारिया तथा अधिकारीहरूबाट कष्ट पुऱ्याउनुको भय थियो, इस्राईलको सन्तान हुन् त फ़िरऔनको दासता तथा अधीनताको अपमान धेरै समयदेखि सहन गर्दै आइराखेका थिए।

لَعَالٍ فِي الْأَرْضِ ۚ وَإِنَّهُ لَمِنَ الْمُسْرِفِينَ ﴿٨٣﴾

फ़िरऔन त्यस देशमा उच्च शक्ति भएको थियो, तथा यो कुरो पनि थियो कि त्यो सीमाभन्दा बाहिर जाने गर्दथ्यो ।[1]

وَقَالَ مُوسَىٰ يَا قَوْمِ إِن كُنتُمْ آمَنتُم بِاللَّهِ فَعَلَيْهِ تَوَكَّلُوا إِن كُنتُم مُّسْلِمِينَ ﴿٨٤﴾

(८४) तथा मूसाले भने, हे मेरा समुदायका मानिसहरू ! यदि तिमी अल्लाहमा विश्वास गर्दछौ भने त्यसैको भरोसा गर, यदि तिमी मुसलमान (आज्ञापालक) हौ ।[2]

فَقَالُوا عَلَى اللَّهِ تَوَكَّلْنَا رَبَّنَا لَا تَجْعَلْنَا فِتْنَةً لِّلْقَوْمِ الظَّالِمِينَ ﴿٨٥﴾

(८५) त उनीहरूले भने कि हामीले अल्लाहमै भरोसा गर्‍यौं । हे हाम्रो प्रभु ! हामीलाई यी अत्याचारी समुदायको भोगी नबनाउ ।

وَنَجِّنَا بِرَحْمَتِكَ مِنَ الْقَوْمِ الْكَافِرِينَ ﴿٨٦﴾

(८६) तथा हामीलाई आफ्नो कृपाले यी काफ़िरहरूबाट मुक्ति प्रदान गर ।[3]

---

तर मूसा अलैहिस्सलाममाथि ईमान ल्याउनुबाट उसको कुनै सम्बन्ध थिएन, न उनीहरूलाई यसको कारणले अधिक भय थियो ।

[1]तथा ईमान भएकाहरू त्यही त्यसै अत्याचार तथा क्रुरताको व्यवहारबाट भयभीत थिए ।

[2]इस्राईलका सन्तान फ़िरऔनको तर्फबाट जुन अनादर एवं अपमानको शिकार थियो आदरणीय मूसा आएपश्चात पनि त्यसमा कमी आएन, यसकारण उनी अधिक परेशान थिए । बरू आदरणीय मूसासित उनीहरूले यहाँसम्म भने, हे मूसा ! जुनप्रकार तिमी आउनुभन्दा पूर्व हामी फ़िरऔन तथा त्यसको समुदायबाट दिइएका दुखहरूमा थियौं, तिमी आए पश्चात हाम्रो त्यही अवस्था छ जसपश्चात आदरणीय मूसाले उनीहरूलाई उत्तर दिए कि आशा छ कि मेरो प्रभुले शीघ्र नै तिम्रो शत्रुलाई नष्ट गरिदिनेछ। तर त्यसको लागि आवश्यक छ कि तिमी केवल एक अल्लाहबाट सहायता माँग तथा धैर्यले काम लिउ । (हेर्नुस् सूर: अल-आराफ, आयत १२८ तथा १२९) यहाँपनि आदरणीय मूसाले उनीहरूलाई जोड दिएर भने कि यदि तिमी अल्लाहका साँचो आज्ञाकारी हौ भने त्यसैमाथि भरोसा गर ।

[3]अल्लाहमा भरोसा गर्नुका साथ-साथ उनले अल्लाहको दरबारमा प्रार्थना पनि गरे । तथा अवश्य निष्ठावानहरूका लागि यो एउटा ठूलो हथियार पनि हो तथा सहारा पनि ।

وَاَوْحَيْنَآ اِلٰى مُوْسٰى وَاَخِيْهِ اَنْ تَبَوَّاٰ لِقَوْمِكُمَا بِمِصْرَ بُيُوْتًا وَّاجْعَلُوْا بُيُوْتَكُمْ قِبْلَةً وَّاَقِيْمُوا الصَّلٰوةَ ۗ وَبَشِّرِ الْمُؤْمِنِيْنَ ۝٨٧

(८७) तथा हामीले मूसा तथा उनको भाईतिर वह्यी (प्रकाशना) पठायौं ताकि तिमी दुबै आफ्ना यी मानिसहरुका लागि मिश्रमा घर स्थापित गर तथा तिमी सबै तिनै घरहरुलाई नमाज पढ्ने स्थान निर्धारित गर ।[1] तथा निरन्तर नमाज पढ तथा तपाईं ईमान भएकाहरुलाई शुभ-सूचना दिनुहोस् ।

وَقَالَ مُوْسٰى رَبَّنَآ اِنَّكَ اٰتَيْتَ فِرْعَوْنَ وَمَلَاَهٗ زِيْنَةً وَّاَمْوَالًا فِى الْحَيٰوةِ الدُّنْيَا ۙ رَبَّنَا لِيُضِلُّوْا عَنْ سَبِيْلِكَ ۚ رَبَّنَا اطْمِسْ عَلٰٓى اَمْوَالِهِمْ وَاشْدُدْ عَلٰى قُلُوْبِهِمْ فَلَا يُؤْمِنُوْا حَتّٰى يَرَوُا الْعَذَابَ الْاَلِيْمَ ۝٨٨

(८८) तथा मूसाले विन्ती गरे, हे मेरा प्रभु ! तिमीले फ़िरऔन तथा त्यसका पदाधिकारीहरुलाई शोभा तथा प्रत्येक प्रकारको धन सांसारिक जीवनमा प्रदान गर्‍यौं । हे हाम्रा प्रभु ! (यसकारण प्रदान गरेका छौ) कि उनीहरु तिम्रो मार्गबाट विचलित गराऊन् । हे हाम्रा प्रभु ! उनका धनहरुलाई ध्वस्त गरिदेउ उनका हृदयहरुलाई कठोर गरिदेउ,[2] ताकि यिनी ईमान स्थापित गर्न नसकून् यहाँसम्मकि दुखदायी यातनाहरु देखून् ।[3]

[1]यसको अर्थ यो हो कि आफ्ना घरहरूलाई नै मस्जिदहरू बनाऊ तथा उनका मुख आफ्नो क़िब्ला (बैतुल मुक़द्दस) तिर गर ताकि तिमीलाई इबादत (उपासना) गर्नको लागि चर्च आदिमा जानुको आवश्यकता नै नरहोस्, जहाँ तिमीलाई फ़िरऔनका कर्मचारीहरूको अत्याचार एवं क्रुरताको भय रहन्छ ।

[2]जब मूसा अलैहिस्सलामले देखे कि फ़िरऔन तथा उसका समुदायमाथि शिक्षा एवं उपदेशको पनि कुनै प्रभाव भएन तथा यसप्रकारका चमत्कार देखेर पनि उनको मनमा कुनै परिवर्तन आएन, त उनलाई श्राप दिनुभयो, जसलाई अल्लाह तआलाले वर्णित गरेको छ ।

[3]अर्थात् यदि उनीहरूमा ईमान ल्याउँछन् पनि त प्रकोप देखेर नै ईमान कायम गरून्, जुन उनको लागि लाभकारी हुने छैन । यहाँ मस्तिष्कमा यो शंका उत्पन्न हुनुहुँदैन कि पैगम्बर त मार्गदर्शनको लागि प्रार्थना गर्दछन् न कि नष्ट भईजाने कुरोको श्राप । यसकारण कि आमन्त्रण तथा चेतावनी तथा हरेक प्रकारका साधन प्रयोग गरिहाले पश्चात यो स्पष्ट हुन्छ कि निष्ठावान हुने कुराको कुनै आशा

(८९) (अल्लाह तआ़लाले) भन्यो कि तिमी दुबैका प्रार्थनाहरू स्वीकार गरिए । तिमी सोझो मार्गमा रह ।[1] तथा तिनीहरूको मार्गमा न हिंड जो अज्ञानी छन् ।[2]

قَالَ قَدْ اُجِيْبَتْ دَّعْوَتُكُمَا فَاسْتَقِيْمَا وَلَا تَتَّبِعٰٓنِّ سَبِيْلَ الَّذِيْنَ لَا يَعْلَمُوْنَ ﴿٨٩﴾

(९०) तथा हामीले इस्राईलका सन्तानलाई समुद्रबाट पारी तारिदिऔं ।[3] अनि उनका पछि-पछि फ़िरऔन आफ्नो सेनाको साथमा अत्याचार तथा क्रुरताको उद्देश्यले हिंड्यो, यहाँसम्मकि

وَجٰوَزْنَا بِبَنِيْٓ اِسْرَآءِيْلَ الْبَحْرَ فَاَتْبَعَهُمْ فِرْعَوْنُ وَجُنُوْدُهٗ بَغْيًا وَّعَدْوًا ؕ حَتّٰٓى اِذَآ اَدْرَكَهُ الْغَرَقُ ۙ

बाँकी छैन, त अन्तिम उपाय यही रहन्छ कि यस समुदायको मामिला अल्लाहलाई अर्पित गरियोस् । यो मानो अल्लाहको इच्छा हुन्छ, जुन पैग़म्बरको मुखबाट अकस्मात निस्कन्छ । जस्तो कि आदरणीय नूहले पनि नौंसय वर्ष चेतावनी दिए पश्चात अन्ततः आफ्नो समुदायलाई श्राप नै दिनुभयो ।

﴿رَبِّ لَا تَذَرْ عَلَى الْاَرْضِ مِنَ الْكٰفِرِيْنَ دَيَّارًا﴾

हे प्रभु ! धर्तीमा एउटा पनि काफ़िरलाई बसेको रहन नदेउ ।" (सूरः नूह-२६)

[1]यसको एउटा अर्थ त यो हो कि आफ्नो श्रापमा स्थिर रहनु, चाहे त्यो प्रदर्शित हुनमा ढिलो होस् । किनभने तिम्रो प्रार्थना अवश्य स्वीकार गरियो परन्तु त्यसको कार्यन्वयन हामी कहिले गर्नेछौं, यो मात्र हाम्रो इच्छा तथा योजनाहरूमाथि आधारित छ । अतः केही व्याख्याकार भन्दछन् कि यस श्रापका चालीस वर्ष पश्चात फ़िरऔन तथा त्यसको समुदायलाई नष्ट गरियो तथा श्राप अनुसार जब फ़िरऔन डुब्न थाल्यो, त्यससमय उसले ईमान स्थापित कुराको घोषणा गऱ्यो, जसको उसलाई कुनै लाभ पुगेन । दोस्रो अर्थ त्यसको यो हो कि तिमी आफ्नो प्रचार तथा इस्राईलका वंशलाई मार्ग दर्शाउने तथा सोझो मार्ग देखाउने एवं उनीहरूलाई फ़िरऔनको दासताबाट मुक्ति दिलाउने प्रयत्न जारी राख ।

[2]अर्थात् जुन मानिसहरू अल्लाहको व्यवहार, त्यसको नियम, त्यसका हित तथा भेदहरूलाई जान्दैनन्, तिमी उनी सरह नहुनु बरू अब प्रतिक्षा एवं धैर्य गर, अल्लाह तआ़ला आफ्नो ज्ञान तथा योजनानुसार ढिलो अथवा चाँडो अवश्य आफ्नो वाचा पूरा गर्नेछ किनभने त्यसले वाचा विरूद्ध गर्दैन ।

[3]अर्थात् समुद्रलाई च्यातेर मार्ग बनाइदियो (जुनप्रकार सूरः अल-बकरः आयत ५० मा चर्चित भयो तथा अन्य विवरण सूरः शोअरामा आउनेछ) तथा तिमीलाई एउटा किनारादेखि अर्को किनारासम्म पुऱ्याइदियो ।

قَالَ اٰمَنْتُ اَنَّهٗ لَآ اِلٰهَ اِلَّا الَّذِيْٓ اٰمَنَتْ بِهٖ بَنُوْٓا اِسْرَآءِيْلَ وَاَنَا مِنَ الْمُسْلِمِيْنَ ﴿٩٠﴾

जब डुब्न थाल्यो,[1] त भन्यो, म ईमान सुदृढ गर्छु जसमाथि इस्राईलका सन्तान ईमान स्थापित गरेका छन्, त्यस बाहेक अन्य कोही पूजा योग्य छैन तथा म मुसलमानहरू मध्येबाट हूँ।

آٰلْـٰٔنَ وَقَدْ عَصَيْتَ قَبْلُ وَكُنْتَ مِنَ الْمُفْسِدِيْنَ ﴿٩١﴾

(९१) (उत्तर दिइयो कि) अब ईमान स्थापित गर्ने कुरा गर्छौ ? तथा अघि अवज्ञा गरिरह्यो तथा भ्रष्टाचारीहरूमा सम्मिलित रहयो।[2]

فَالْيَوْمَ نُنَجِّيْكَ بِبَدَنِكَ لِتَكُوْنَ لِمَنْ خَلْفَكَ اٰيَةً ؕ وَاِنَّ كَثِيْرًا مِّنَ النَّاسِ عَنْ اٰيٰتِنَا لَغٰفِلُوْنَ ﴿٩٢﴾

(९२) त आज हामी तिम्रो शवलाई छाडिदिनेछौं ताकि तिमी ती मानिसहरूका लागि शिक्षाको चिन्ह होऊ जो तिम्रा पश्चात छन्।[3] तथा वस्तुतः अधिकांश मानिसहरू हाम्रा प्रमाण चिन्हहरूबाट विमुख छन्।

وَلَقَدْ بَوَّاْنَا بَنِيْٓ اِسْرَآءِيْلَ مُبَوَّاَ صِدْقٍ وَّرَزَقْنٰهُمْ مِّنَ الطَّيِّبٰتِ ۚ فَمَا اخْتَلَفُوْا حَتّٰى

(९३) तथा हामीले इस्राईलका सन्तानलाई अति उत्तम बस्ने ठाउँ दियौं तथा हामीले उनीहरूलाई स्वादिष्ट वस्तुहरू भोजनका लागि प्रदान गर्‍यौं त उनीहरूले मतभेद गरेनन् यहाँसम्मकि उनको

[1]अर्थात् अल्लाहको आदेशमा चमत्कारिक रूपले बनेका जलीय मार्गमा, जसमा हिंडेर मूसा तथा उसका समुदायले समुद्र पार गरे, फ़िरऔन तथा त्यसका सेना समुद्रपार गर्ने विचारले हिंड्न प्रारम्भ गरे। उद्देश्य यो थियो कि मूसा इस्राईलका सन्तानलाई, जो मेरो दासतावाट स्वतन्त्र गराउनको उद्देश्यले रातारात ल्यायो, त उसलाई पुनः वन्दी बनाइयोस्। जब फ़िरऔन तथा उसको सेना त्यस मार्गमा प्रवेश गर्‍यो त अल्लाहले समुद्रलाई अघि जस्तै बग्नुको आदेश दियो। परिणाम स्वरूप फ़िरऔन सहित सबै समुद्रमा डुबिहाले।

[2]अल्लाहको तर्फवाट उत्तर दिइयो कि अब ईमानको कुनै लाभ हुने छैन किनभने जब ईमान ल्याउने समय थियो, त्यसवखत त अवहेलना अवज्ञाकारिता तथा भ्रष्टाचारमा लिप्त रहयो।

[3]जब फ़िरऔन डुब्यो त त्यसको मृत्युबारे धेरैजसोलाई विश्वास लाग्दैनथ्यो। अल्लाह तआलाले समुद्रलाई आदेश दियौ, अनि त्यसले त्यसको शवलाई किनारामा फ्याँकिदियो, जसलाई सबैले देखे। प्रसिद्ध छ कि आजपनि यो लाश मिश्रको संग्राहलय सुरक्षित छ। (وَاللّٰهُ أَعْلَمُ بِالصواب)

جَآءَهُمُ الْعِلْمُ ۭ اِنَّ رَبَّكَ يَقْضِيْ بَيْنَهُمْ يَوْمَ الْقِيٰمَةِ فِيْمَا كَانُوْا فِيْهِ يَخْتَلِفُوْنَ ۝

पासमा ज्ञान पुग्यो ।[1] यो निश्चित कुरो छ कि तपाईंको प्रभु उनीहरूबीच कियामतका दिन ती कुराहरूमा निर्णय गरिदिनेछ जसमा तिनीहरूले मतभेद गर्दथे ।

فَاِنْ كُنْتَ فِيْ شَكٍّ مِّمَّآ اَنْزَلْنَآ اِلَيْكَ فَسْــَٔـلِ الَّذِيْنَ يَقْرَءُوْنَ الْكِتٰبَ مِنْ قَبْلِكَ ۚ لَقَدْ جَاۗءَكَ الْحَقُّ مِنْ رَّبِّكَ فَلَا تَكُوْنَنَّ مِنَ الْمُمْتَرِيْنَ ۝

(९४) अनि यदि तपाईं त्यसतिरबाट शंकामा हुनुहुन्छ जुन हामीले तपाईंतिर पठाएका छौं, त तपाईं उनीहरूसित सोध्नुस् जो तपाईंभन्दा पूर्वका किताबहरू पढ्दछन् । निःसन्देह तपाईंको पासमा तपाईंको प्रभुको तर्फबाट सत्य किताब आएको छ । तपाईं कदापि सन्देह गर्नेमध्येको नहुनुहोस् ।[2]

وَلَا تَكُوْنَنَّ مِنَ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِ اللّٰهِ فَتَكُوْنَ مِنَ الْخٰسِرِيْنَ ۝

(९५) तथा न ती मानिसहरूमध्येबाट हुनुहोस्, जसले अल्लाह (तआला) का आयतहरूलाई झुट्लाए अन्यथा तपाईं घाटा बेहोर्नेहरूमा पर्नु हुनेछ ।[3]

---

[1]अर्थात् एक त अल्लाहको कृतज्ञता गर्नुको सट्टा आपसमा मतभेद गरे, यो मतभेद पनि अज्ञानता तथा मूर्खताको कारण गरेनन् बरू ज्ञान आएपश्चात गरे, जसको स्पष्ट अर्थ यो हो कि मतभेद मात्र वैरभाव तथा घमण्डको आधारमा थिए ।

[2]यो सम्वोधन या त जनसामान्यको लागि छ अथवा नबी सल्लल्लाहु अलैहि वसल्लमको माध्यमबाट मुसलमानहरूलाई शिक्षा दिइँदै छ, किनभने नबी सल्लल्लाहु अलैहि वसल्लमलाई वह्यी (प्रकाशना) को विषयमा सन्देह हुनसक्दैन । "जो किताव पढ्छन्, उनीसँग सोध्नुस्" को अर्थ हो कि कुरआन मजीदभन्दा पूर्वका आकाशीय पुस्तकहरू (तौरात तथा इंजील आदि) । अर्थात् जसका पासमा यी किताबहरू उपलब्ध छन्, उनीहरूसित यस किताबको बारेमा ज्ञान गर्नुस् किनभने उनीहरूमा यसका लक्षण तथा अन्तिम पैगम्बर (ईशदूत) का गुणहरूको वर्णन छ ।

[3]यो पनि वास्तवमा मुसलमानहरूलाई पनि सम्झाइदैछ कि झुट्लाउनुको मार्ग हानि तथा विनाशको मार्ग हो ।

إِنَّ الَّذِينَ حَقَّتْ عَلَيْهِمْ كَلِمَتُ رَبِّكَ لَا يُؤْمِنُونَ ﴿٩٦﴾

(९६) निःसन्देह जुन मानिसहरूको विषयमा तपाईंको प्रभुका कुरा सिद्ध भइसकेका छन्, उनीहरूले ईमान स्थापित गर्ने छैनन् ।

وَلَوْ جَاءَتْهُمْ كُلُّ آيَةٍ حَتَّىٰ يَرَوُا الْعَذَابَ الْأَلِيمَ ﴿٩٧﴾

(९७) उसको पासमा चाहे सबै तर्क पुगून्, जबसम्म उनी दुखदायी यातना देख्दैनन् ।[1]

فَلَوْلَا كَانَتْ قَرْيَةٌ آمَنَتْ فَنَفَعَهَا إِيمَانُهَا إِلَّا قَوْمَ يُونُسَ

(९८) अतः कुनै वस्ती ईमान कायम गरेन कि ईमान ल्याउनु उनका लागि लाभकारी हुन्थ्यो, यूनुसका समुदायका बाहेक ।[2] जब उनीहरूले ईमान स्थापित गरे,

[1]यी तिनै मानिसहरू हुन् जो अधर्म तथा अल्लाहको अवज्ञामा यति डुबिसकेका हुन्छन् कि उनीमाथि कुनै शिक्षा-दीक्षाको प्रभाव पर्दैन, तथा कुनै तर्क उनको लागि प्रभावी हुँदैन । यसैकारण कि अवहेलना तथा अवज्ञाकारिताका कारण सत्यलाई स्वीकार गर्ने प्राकृतिक गुण तथा विशेषतालाई उनीहरू समाप्त गरिसकेका हुन्छन्, उनका आँखा यदि खुल्छन्, त त्यसवेला जब अल्लाहको प्रकोप उनको टाउकोमाथि आइपुगेको हुन्छ त्यतिखेर त्यो ईमान अल्लाहको दरबारमा स्वीकार हुँदैन ।

﴿فَلَمْ يَكُ يَنْفَعُهُمْ إِيمَانُهُمْ لَمَّا رَأَوْا بَأْسَنَا﴾

"जब उनीहरूले हाम्रो प्रकोप देखि सके (त्यसवेला) उनको ईमानले उनीहरूलाई कुनै लाभ दिएन ।" (सूरः अल-मोमिन, ८५)

[2](لَوْلَا) यो उत्तेजितका लागि (هلا) को अर्थमा छ, अर्थात् जुन वस्तीहरूलाई हामीले विनाश गर्‍यौं, तिनीमध्ये कुनै एउटा यस्तो वस्ती किन भएन, जसले यस्तो ईमान स्थापित गर्दथ्यो, जुन उनको लागि लाभकारी हुन्थ्यो । हो, केवल यूनुसको समुदाय यस्तो भयो कि जब त्यसले ईमान ल्यायो त अल्लाहले त्यसबाट प्रकोप हटाइदियो । यसको संक्षिप्त वर्णन यसप्रकार छ कि जब यूनुस अलैहिस्सलामले देखेकि उनको चेतावनी तथा धार्मिक शिक्षाको प्रभाव उनको समुदायमाथि भइराखेको छैन, त उनले आफ्नो समुदायमा घोषणा गरे कि अमुक-अमुक दिनमा तिमीमाथि प्रकोप आउने छ तथा स्वयं त्यहाँबाट निस्केर गए । जब प्रकोप मेघको रूपमा उनीमाथि छाइहाल्यो त उनी बच्चा, स्त्री यहाँसम्मकि पशुहरूलाई लिएर एउटा मैदानमा एकत्रित भए तथा अल्लाहको दरबारमा विनम्र विनती, तौवा, क्षमा-याचना प्रारम्भ गरिदिए । अल्लाह तआलाले उनको तौबा स्वीकार गरी उनीमाथिको प्रकोप हटाइदियो । आदरणीय यूनुस आवत-जावत गर्ने यात्रीहरूसित आफ्नो समुदायको समाचार सोधिरहन्थे, उनीहरूलाई जब थाहा भयो कि अल्लाह तआलाले उनको समुदाय माथिबाट प्रकोप हटाइदिएको छ, तब उनलाई आफू झुट्लाइए पश्चात आफ्नो त्यस समुदायमा फर्किजानु राम्रो लागेन, बरू उनीहरूसित अप्रसन्न भई कुनै अन्य दिशातिर हिंडिदिए,

لَمَّآ اٰمَنُوْا كَشَفْنَا عَنْهُمْ عَذَابَ الْخِزْيِ فِى الْحَيٰوةِ الدُّنْيَا وَمَتَّعْنٰهُمْ اِلٰى حِيْنٍ ﴿٩٨﴾

त हामीले अपमानको यातना सांसारिक जीवनमा उनीबाट हटाइदियौं तथा उनलाई एउटा (निश्चित) समयसम्म सुख भोग्नु (का अवसर) दियौं ।[1]

وَلَوْ شَآءَ رَبُّكَ لَاٰمَنَ مَنْ فِى الْاَرْضِ كُلُّهُمْ جَمِيْعًا ؕ اَفَاَنْتَ تُكْرِهُ النَّاسَ حَتّٰى يَكُوْنُوْا مُؤْمِنِيْنَ ﴿٩٩﴾

(९९) यदि तपाईंको प्रभुले चाहेको भए समस्त धर्तीका सबै मानिसहरू ईमान भएका हुने थिए,[2] त के तपाईं बाध्य गर्न सक्नुहुन्छ कि उनीहरू मोमिन नै भइहालून् ?

जसमा त्यो ढुङ्गाको घटना घटित भयो (जसको विस्तृत वर्णन आफ्नो स्थानमा आउनेछ । (फ़तहुल क़दीर) तर व्याख्याकारहरूको यस कुरामा मतभेद छ कि यूनुसको समुदाय ईमान कहिले कायम गऱ्यो ? प्रकोप देखेर गऱ्यो, जबकि ईमान स्थापित गर्नु लाभकारी हुँदैन । परन्तु अल्लाह तआलाले उसलाई आफ्नो यस नियमबाट अलग्ग गरी उसको ईमानलाई स्वीकार गऱ्यो । अथवा अझै प्रकोप आएको थिएन अथवा त्यो अवस्था आएको थिएन कि जब ईमान ल्याउनु लाभकारी हुँदैन, परन्तु कुरआन करीमले यूनुसको समुदायलाई ( إلا ) को शब्दसित जुन अलग्ग गरेको छ, त्यो प्रथम व्याख्याको पुष्टि गर्दछ ।

[1]कुरआनले सांसारिक प्रकोपलाई हटाउनुको वर्णन त गरेको छ, परलोकको यातनाको विषयमा कुनै वर्णन गरेन, यसकारण केही ब्याख्याकारहरूको विचार छ कि उनीबाट परलोकको यातना समाप्त गरिएन । परन्तु जब कुरआनले यो अस्पष्ट गऱ्यो कि सांसारिक प्रकोप ईमान भएका कारण हटाइएको थियो, त त्यसपछि परलोकको यातनाको वर्णन गर्नुको आवश्यकता नै रहँदैन । किनभने परलोकको यातनाको निर्णय ईमान तथा ईमान नहुनुकै आधारमा हुनुछ । यदि ईमान ल्याए पश्चात यूनुसको समुदाय आफ्नो ईमानमा स्थिर रहेको होला (जसको वर्णन यहाँ छैन) त निःसन्देह उनी परलोकको यातनाबाट सुरक्षित रहनेछन् । तथा अन्य परिस्थितिमा सुरक्षा केवल संसारको सीमासम्म हुनेछ ।

[2]परन्तु अल्लाहले यस्तो चाहेन किनभने यो उसको योजनाको तथा इच्छा विपरीत छ, जसलाई पूर्णरूपले त्यही जान्दछ । यो यसकारण भन्यो कि नबी सल्लल्लाहु अलैहि वसल्लमको तीव्र इच्छा हुन्थ्यो कि सबै मुसलमान भईहालून्, अल्लाह तआलाले भन्यो : यो हुन सक्दैन किनभने अल्लाहका इच्छा सर्वोच्च ज्ञान तथा श्रेष्ठतम रहस्यमा आधारित छ, त्यसको यो माँग होइन । यसकारण अगाडी भन्यो कि तपाईं मानिसहरूलाई बलपूर्वक ईमान ल्याउनमा कसरी बाध्य गर्न सक्नुहुन्छ ? जबकि तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) मा न यसको शक्ति छ न त्यसको उत्तरदायी हुनुहुन्छ ।

وَمَا كَانَ لِنَفْسٍ اَنْ تُؤْمِنَ اِلَّا بِاِذْنِ اللّٰهِ ؕ وَ يَجْعَلُ الرِّجْسَ عَلَى الَّذِيْنَ لَا يَعْقِلُوْنَ ۝

(१००) यद्यपि कसैबाट ईमान स्थापित गर्नु अल्लाहको आज्ञा बिना सम्भव छैन। तथा अल्लाह (तआ़ला) ले बुद्धिले काम नलिने मानिसहरूमाथि अशुद्धि थोपिदिन्छ।[1]

قُلِ انْظُرُوْا مَاذَا فِى السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَمَا تُغْنِى الْاٰيٰتُ وَالنُّذُرُ عَنْ قَوْمٍ لَّا يُؤْمِنُوْنَ ۝

(१०१) तपाईं भन्नुहोस् कि तिमी विचार गर कि के-के कुरा आकाशहरू तथा धर्तीमा छन् तथा जुन मानिसहरू विशवास गर्दैनन्, उनीहरूलाई तर्क तथा चेतावनीले कुनै लाभ पुऱ्याउँदैनन्।

فَهَلْ يَنْتَظِرُوْنَ اِلَّا مِثْلَ اَيَّامِ الَّذِيْنَ خَلَوْا مِنْ قَبْلِهِمْ ؕ قُلْ فَانْتَظِرُوْٓا اِنِّىْ مَعَكُمْ مِّنَ الْمُنْتَظِرِيْنَ ۝

(१०२) त के उनीहरू केवल ती मानिसहरूका जस्तै घटनाहरूको प्रतीक्षा गरिराखेका छन्, जो उनीभन्दा पूर्व गुज्रिसकेका छन्, (तपाईं) भनिदिनुस् कि ठीक छ त्यसोभए तिमी प्रतिक्षामा रह, म पनि तिमीसँग प्रतिक्षा गर्नेहरूमध्ये हुँ।[2]

ثُمَّ نُنَجِّىْ رُسُلَنَا وَالَّذِيْنَ اٰمَنُوْا كَذٰلِكَ ۚ حَقًّا عَلَيْنَا نُنْجِ الْمُؤْمِنِيْنَ ۝

(१०३) अनि हामीले आफ्ना पैग़म्बरहरूलाई तथा ईमान भएकाहरूलाई बचाउँथ्यौं, यसैप्रकार हाम्रो अधिकारमा छ कि हामीले ईमान भएकाहरूलाई छुटकारा दिने गर्दछौं।

[1]अशुद्धतासित तात्पर्य यातना अथवा कुफ्र (अविश्वास) छ। अर्थात् जुन मानिसहरू अल्लाहका निशानीहरूमाथि विचार गर्दैनन्, उनीहरू कुफ्र (अधर्म) मा नै लिप्त रहन्छन् तथा यसप्रकार यातनाको अधिकारी हुन पुग्छन्।

[2]अर्थात् जुन मानिसहरूमाथि कुनै तर्क तथा चेतावनी प्रभाव हुँदैन, यसकारण उनीहरू ईमान कायम गर्दैनन्, के यस कुराको प्रतिक्षामा छन् कि उनीसँग पनि त्यही इतिहासको पुनरावृत्ति गरियोस्, जुन उनीभन्दा पूर्वका समुदायहरूमाथि घटित भइसकेको छ। अर्थात् ईमान भएकाहरूलाई बचाएर (जस्तो कि आउने आयतमा स्पष्टीकरण छ) शेष सबैलाई नष्ट गरिदिन्थ्यो। यदि यस कुरोको प्रतिक्षा छ भने, तिमी पनि प्रतिक्षा गर, म पनि प्रतिक्षा गरिराखेको छु।

(१०४) (तपाई) भनिदिनुस्[1] कि हे मानिसहरू ! यदि तिमी मेरो धर्मको विषयमा शंकामा छौ, भने म ती देवताहरूको उपासना गर्दिन, जसलाई, तिमी अल्लाहलाई छाडेर, पूजा गर्दछौ ।[2] तर हो, त्यस अल्लाहको इबादत गर्दछु, जसले तिम्रो प्राण निकाल्दछ,[3] तथा मलाई आदेश भएको छ कि निष्ठावानहरू मध्येबाट होउ ।

قُلْ يَٰٓأَيُّهَا ٱلنَّاسُ إِن كُنتُمْ فِى شَكٍّ مِّن دِينِى فَلَآ أَعْبُدُ ٱلَّذِينَ تَعْبُدُونَ مِن دُونِ ٱللَّهِ وَلَٰكِنْ أَعْبُدُ ٱللَّهَ ٱلَّذِى يَتَوَفَّىٰكُمْ ۖ وَأُمِرْتُ أَنْ أَكُونَ مِنَ ٱلْمُؤْمِنِينَ ﴿١٠٤﴾

(१०५) तथा यो कि एकाग्र भएर आफ्नो अनुहार यस धर्मतिर[4] गर तथा अहिले तथा मुश्रिकहरूमा कदापि सम्मिलित नहोउ. ।

وَأَنْ أَقِمْ وَجْهَكَ لِلدِّينِ حَنِيفًا وَلَا تَكُونَنَّ مِنَ ٱلْمُشْرِكِينَ ﴿١٠٥﴾

(१०६) तथा अल्लाहलाई छाडेर कहिल्यै यस्तो कुराको पूजा नगर्नु, जसले तिमीलाई न कुनै लाभ पुऱ्याउन सक्छ न कुनै अहित गर्नसक्छ ।

وَلَا تَدْعُ مِن دُونِ ٱللَّهِ مَا لَا يَنفَعُكَ وَلَا يَضُرُّكَ ۖ فَإِن فَعَلْتَ

[1]यस आयतमा अल्लाह तआला आफ्नो अन्तिम पैग़म्बर (दूत) परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई सन्देश दिइराखेको छ कि तपाई सल्लल्लाहु अलैहि वसल्लम जनसामान्यमा स्पष्ट गरिदिनुस् कि तपाई सल्लल्लाहु अलैहि वसल्लमका मार्ग तथा मुर्तिपूजकहरूको मार्ग एक-अर्काभन्दा भिन्न छन् ।

[2]अर्थात् यदि तिमी मेरो धर्मको विषयमा सन्देह गर्दछौ जसमा मात्र एक अल्लाहको उपासना छ तथा यही धर्म सत्य छ, न कि अन्य कुनै, त याद राख कि म कहिले पनि यी देवताहरूको कुनै पनि अवस्थामा पूजा गर्ने छैन, जसको तिमी गर्दछौ ।

[3]अर्थात् जीवन-मृत्यु उसैको हातमा छ, यसकारण जब त्यो चाहन्छ तिमीलाई मार्न सक्दछ किनभने मनुष्यहरूका प्राण उसैका हातमा छन् ।

[4]हनीफ़को अर्थ हो एकाग्रता, अर्थात् प्रत्येक अन्य धर्म छाडेर इस्लाम धर्म धारण गर्नु तथा हरेकतिरबाट विमुख भएर केवल एक अल्लाहतिर एकाग्रताले आकर्षित हुनु । सबैसित विच्छेद एवं अल्लाहसित सम्बन्ध राख्नु ।

فَإِنَّكَ إِذًا مِّنَ الظَّٰلِمِينَ ۝

अनि यदि यस्तो गऱ्यौ भने तिमी त्यस अवस्थामा अत्याचारीहरू मध्येबाट हुनेछौ ।[1]

وَإِن يَمْسَسْكَ ٱللَّهُ بِضُرٍّ فَلَا كَاشِفَ لَهُۥٓ إِلَّا هُوَ ۖ وَإِن يُرِدْكَ بِخَيْرٍ فَلَا رَآدَّ لِفَضْلِهِۦ ۚ يُصِيبُ بِهِۦ مَن يَشَآءُ مِنْ عِبَادِهِۦ ۚ وَهُوَ ٱلْغَفُورُ ٱلرَّحِيمُ ۝

(१०७) तथा यदि तिमीलाई अल्लाहले कुनै दु:ख पुऱ्याउँछ भने उसबाहेक अन्य त्यसलाई निवारण गर्नेछैन तथा यदि त्यसले तिमीलाई कुनै सुख पुऱ्याउन चाहन्छ भने उसको कृपालाई कोही हटाउन सक्ने छैन,[2] त्यसले आफ्नो कृपा आफ्ना भक्तहरूमध्ये जसमाथि चाहन्छ विस्तार गर्न सक्दछ तथा त्यही अति कृपालु तथा अत्यन्त दयालु छ ।

قُلْ يَٰٓأَيُّهَا ٱلنَّاسُ قَدْ جَآءَكُمُ ٱلْحَقُّ مِن رَّبِّكُمْ ۖ فَمَنِ ٱهْتَدَىٰ فَإِنَّمَا يَهْتَدِى لِنَفْسِهِۦ ۖ وَمَن ضَلَّ

(१०८) (तपाईं) भन्नुहोस् कि हे मानिसहरू ! तिम्रो पासमा तिम्रो प्रभुबाट सत्य आइपुगेको छ ।[3] यसकारण जो व्यक्ति सोझो मार्गमा आउँछ, त त्यो आफ्नो लागि सोझो मार्गमा

[1]अर्थात् यदि अल्लाहलाई छाडेर यस्ता देवताहरूलाई तपाईं पुकार्नु हुन्छ, जो कसैलाई लाभ अथवा हानि पुऱ्याउन सामर्थ्य राख्दैन, त यो अत्याचार हुनेछ । अत्याचारको अर्थ हो (وَضعُ الشَّئی فی غیر محلّہ) कुनै वस्तुलाई त्यसको मूल स्थानबाट हटाएर कुनै अन्य स्थानमा राखिदिनु । इबादत केवल त्यस अल्लाहको अधिकार हो, जसले सम्पूर्ण सृष्टिको निर्माण गरेको छ तथा जीवनका सबै साधन त्यही उपलब्ध गराउँछ, तसर्थ यस इबादत (पूजा) को अधिकारी अस्तित्वलाई छोडेर कुनै अन्यको पूजा (उपासना) गर्नु, जस्तो कि इबादतको अत्याधिक त्रुटिपूर्ण प्रयोग हो । यसकारण शीर्क (मिश्रणवाद) लाई घोर अत्याचार भनिएको छ । यहाँ पनि यद्यपि सम्बोधन नबी सल्लल्लाहु अलैहि वसल्लमलाई छ, परन्तु वास्तविक सम्बोधन मानव जाति तथा मुसलमानहरूलाई छ ।

[2]पुण्यलाई यहाँ कृपासित यसकारण वर्णन गरिएको छ कि अल्लाह तआला आफ्ना भक्तहरूसित जुन भलाईको कुरो गर्दछ, कर्महरूको आधारमा यद्यपि भक्त त्यसका अधिकारी हुँदैनन्, परन्तु मात्र उसको यो कृपा हो कि त्यो कर्महरूलाई अन्देखि गर्दै मनुष्यहरूमाथि कृपा तथा दया गर्दछ ।

[3]सत्यसित तात्पर्य इस्लाम धर्म तथा कुरआन हो, जसमा अल्लाह एक हुनु तथा मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा ईमान क़ायम गर्नु अनिवार्य छ ।

فَإِنَّمَا يَضِلُّ عَلَيْهَا ۚ وَمَا أَنَا عَلَيْكُم بِوَكِيلٍ

आउनेछ,[१] तथा जो व्यक्ति मार्गबाट विचलित भयो त त्यसको विचलन उसैमथि पर्नेछ ।[२] तथा म तिमीमाथि प्रभारी बनाइएको छैन ।[३]

وَاتَّبِعْ مَا يُوحَىٰ إِلَيْكَ وَاصْبِرْ حَتَّىٰ يَحْكُمَ اللَّهُ ۚ وَهُوَ خَيْرُ الْحَاكِمِينَ

(१०९) तथा तपाईं त्यसको पालना गर्दैरहनुहोला जुन वह्यी (आदेश) तपाईंको पासमा पठाईन्छ तथा धैर्य राख्नुस्,[४] यहाँसम्मकि अल्लाहले निर्णय गरिदेओस् तथा त्यो सबै निर्णायकहरूमध्ये श्रेष्ठ निर्णायक हो ।[५]

[१]अर्थात् यसको लाभ उसैलाई हुनेछ, जो कयामतको दिनको यातनाबाट वच्ने छ ।

[२]अर्थात् त्यसको हानि तथा दण्ड उसैमथि पर्नेछ जो प्रलयका दिन नरक्को आगोमा पोलिने छ अर्थात् यदि कोही सन्मार्ग अपनाउने छ भने त्यसबाट यस्तो हुँदैन कि अल्लाहको शक्ति वढ्नेछ, तथा यदि कोही इन्कार तथा विचलनको मार्ग अपनाउने छ भने त्यसबाट अल्लाहको राज्य तथा शक्तिमा कुनै अन्तर पर्नेछैन ।

[३]अर्थात् मेरो दायित्व यो होइन कि तिमीलाई मुसलमान बनाइदिउँ बरू म त केवल सतर्क गराउनु, शुभ-सूचक, तथा प्रचारक एवं निवेदक हूँ । मेरो काम केवल ईमान भएकाहरूलाई शुभ-सूचना दिनु, अवज्ञाकारीहरूलाई अल्लाहको त्यस पकडबाट तर्साउनु तथा अल्लाहको आदेशतिर आमन्त्रित गरी सचेत गर्नु हो । कोही यस आमन्त्रणलाई स्वीकार गरेर ईमान ल्याउँछ भने ठीक छ, कोही स्वीकार गर्दैन भने म त्यसको उत्तरदायी होइन कि बलपूर्वक गराएर नै छाडुँ ।

[४]अल्लाह तआला जुन कुराको वह्यी (प्रकाशना) गर्दछ, त्यसलाई दृढ्ताले समात्नुहोस्, जुन कुराको आदेश छ, त्यो सम्पन्न गर्नुहोस्, जसबाट मनाही गरिएको छ, त्यसबाट रोकिनुहोस् तथा कुनै कुरामा आलस्य न गर्नुहोस् । तथा प्रकाशनाका पालना तथा कार्यान्वयन गर्न तथा सचेत गर्नु र आमन्त्रित गर्नुका मार्गमा जुन कठिनाईहरूबाट गुज्रनु पर्छ त्यसमा धैर्य धारण गर्नुहोस् दृढ्ताका साथ सबैको सामना गर्नुहोस् ।

[५]किनभने त्यसको ज्ञान पनि पूर्ण छ, त्यसको शक्ति तथा सामर्थ्य पनि विस्तृत छ तथा उसको कृपा पनि सामान्य छ । यसकारण त्यसबाट अधिक उचित निर्णय गर्ने अन्य को हुनसक्छ ?

# सूरतु हूद-११

سُوْرَةُ هُوْدٍ

सूरः हूद* मक्कामा उत्रेको तथा यसका एक सय तेईस आयतहरू तथा दस रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

प्रारम्भ गर्दछु अल्लाहको नामबाट जो अत्यन्त कृपालु तथा अत्यन्त दयालु छ ।

الٓرٰ كِتٰبٌ اُحْكِمَتْ اٰيٰتُهٗ ثُمَّ فُصِّلَتْ مِنْ لَّدُنْ حَكِيْمٍ خَبِيْرٍ ۙ﴿۱﴾

(१) अलिफ. लाम. रा. यो एउटा यस्तो किताब हो कि यसका आयतहरू सुदृढ गरिएको छन्[1] अनि सविस्तार वर्णन गरिएका छन्,[2] एक विवेकी पूर्ण ज्ञानभएको तर्फबाट ।[3]

اَلَّا تَعْبُدُوْٓا اِلَّا اللّٰهَ ؕ اِنَّنِيْ لَكُمْ

(२) यो कि अल्लाहका अतिरिक्त कसैको इबादत (उपासना) नगर । म तिमीलाई



यस सूरःमा पनि ती समुदायहरूको वर्णन छ, जसले अल्लाहका निशानी तथा पैगम्बरहरूलाई झुट्लाए, जसका कारण अल्लाहको प्रकोपको निशाना वने र इतिहासका पृष्ठहरूवाट त्रुटिपूर्ण शव्दहरूको जस्तै मिटाइए, अथवा इतिहासका पृष्ठहरूमा शिक्षाको नमूना बनेर वर्तमान वनेका छन् । यसैकारण हदीसमा छ कि आदरणीय अबू वकर सिद्दीक رضی اللہ عنہ ले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित सोधे कि के कुरो छ तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) बूढो जस्तो देखिहुन्छ ? त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले उत्तर दिनुभयो किनभने मलाई सूरः हूद, वाकिय:, अम्मयतसाअलूतन तथा इज़ाश्शम्सु कूवेरत आदिले बूढा गरिदिएका छन् । (तिर्मिजी संख्या ३२९७, सही तिर्मिजी अलबानी ३/११३)

[1]अर्थात् शव्द तथा शैलीमा यति सुदृढ तथा पक्का छ कि उनका कम तथा अर्थमा कुनै त्रुटि छैन ।

[2]अनि यसमा आदेश तथा नियम, उपदेश तथा कथाहरू, विश्वास तथा ईमान, चरित्र एवं सम्मान जुनप्रकार स्पष्टरूपले तथा विस्तारपूर्वक वर्णन गरिएका छन्, पूर्वका किताबहरूमा त्यसको तुलना प्रस्तुत गर्नमा असमर्थ छन् ।

[3]अर्थात् आफ्नो कथनमा ज्ञानी छ, यसकारण उसको तर्फबाट उतारिएका कुराहरू ज्ञानबाट रिक्त छैनन् तथा त्यो सूचित पनि छ अर्थात् सबै विषय तथा तिनका परिणामबाट अवगत छ । यसकारण त्यसका कुराहरूमा कर्म गर्नाले नै मनुष्य दुष्परिणामबाट बच्न सक्छ ।

مِّنۡهُ نَذِيۡرٌ وَّبَشِيۡرٌ ۟ۙ

अल्लाहको तर्फबाट सतर्क गराउन तथा शुभ-सूचना दिनको लागि हूँ ।

وَّاَنِ اسۡتَغۡفِرُوۡا رَبَّكُمۡ ثُمَّ تُوۡبُوۡۤا اِلَيۡهِ يُمَتِّعۡكُمۡ مَّتَاعًا حَسَنًا اِلٰٓى اَجَلٍ مُّسَمًّى وَّيُؤۡتِ كُلَّ ذِىۡ فَضۡلٍ فَضۡلَهٗ ؕ وَاِنۡ تَوَلَّوۡا فَاِنِّىۡۤ اَخَافُ عَلَيۡكُمۡ عَذَابَ يَوۡمٍ كَبِيۡرٍ ۟

(३) तथा यो भन्नलाई कि तिमीहरू आफ्नो पाप आफ्नो प्रभुबाट क्षमा गराउ, अनि उसैतिर ध्यान-मग्न होउ, त्यसले तिमीलाई निर्धारित समयसम्म सुख-सुविधा दिनेछ[1] तथा प्रत्येक अधिक राम्रो कार्य गर्नेलाई अधिक पुण्य दिनेछ । तथा यदि तिमीहरू बिमुख हुँदैगर्‍यौ भने मलाई तिम्रो लागि एक महान दिन[2] को यातनाको चिन्ता छ ।

اِلَى اللّٰهِ مَرۡجِعُكُمۡ‌ ۚ وَهُوَ عَلٰى كُلِّ شَىۡءٍ قَدِيۡرٌ ۟

(४) तिमीलाई अल्लाहकै पासमा जानुछ तथा त्यसले प्रत्येक वस्तुमा पूर्ण सामर्थ्य राख्दछ ।

اَلَاۤ اِنَّهُمۡ يَثۡنُوۡنَ صُدُوۡرَهُمۡ لِيَسۡتَخۡفُوۡا مِنۡهُ ؕ اَلَا حِيۡنَ

(५) याद राख कि तिनीहरू आफ्ना छातिहरूलाई मोड्छन् ताकि आफ्ना कुरा (अल्लाहबाट) लुकाउन सकून् ।[3] याद राख कि उनीहरू

[1]यहाँ त्यस सांसारिक संसाधनहरूलाई जसलाई कुर्आनले सामान्य रूपले गर्वका साधन, धोकाको सामान भनेको छ, यहाँ त्यसलाई"सुख सामग्री" भनिएको छ । यसको अर्थ यो भयो कि जसले परलोकबाट निश्चित भएर सांसारिक सुखबाट लाभ प्राप्त गर्नेछ, त्यसको लागि यो धोकाको साधन हो, किनकि त्यस पश्चात उसलाई दुष्परिणाम भोग्नु पर्नेछ तथा जसले परलोकको तयारीका साथ-साथ त्यसबाट लाभ उठाउने छ, उसको लागि क्षणिक जीवन सामग्री सुख सामग्री छ, किनभने उसले त्यसलाई अल्लाहको आदेशानुसार प्रयोग गरेको छ ।

[2]ठूलो दिनबाट तात्पर्य क़ेयामतको दिन हो ।

[3]यसको अवतरित हुने कुराको विशेषतामा व्याख्याकारहरूमा मतभेद छ । अतः यसको भावार्थमा पनि मतभेद छ । तैपनि सहीह बुख़ारी तफसीर सूरः हूदमा वर्णित अवतरणको विशेषताबाट ज्ञान हुन्छ कि यो ती मुसलमानहरूको विषयमा अवतरित छ, जो शर्मको (लज्जा) प्रभावबाट प्रभावित हुनुका कारण शौच तथा पत्नीसँग संभोगको समय निर्वस्त्र हुनु प्रिय ठान्दैनथे कि अल्लाह तआला हामीलाई देखिराखेको छ, यसकारण यस्ता अवसरहरूमा उनी गुप्ताङ्गहरूलाई लुकाउनको लागि आफ्नो छातिहरूलाई खुम्च्याई बटार्थे । अल्लाह तआलाले भन्नुभयो

يَسْتَغْشُوْنَ ثِيَابَهُمْ ۙ يَعْلَمُ مَا يُسِرُّوْنَ وَمَا يُعْلِنُوْنَ ۚ اِنَّهٗ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ⑤

जतिखेर आफ्ना वस्त्र बेर्दछन्, त्यो त्यस समय पनि सबै थोक जान्दछ, जे-जति उनीहरू लुकाउँछन् र जे-जति प्रकट गर्दछन् । निःसन्देह त्यो हृदय भित्रका कुराहरू जान्दछ ।



कि रात्रिको अँध्यारोमा जब उनीहरू ओछ्यानमा आफूलाई कपडाले छोप्दथे, त त्यस समय पनि त्यो (अल्लाह) उनलाई देख्दथ्यो तथा उनका लुकेका तथा प्रकट कुराहरूलाई जान्दछ । अर्थ यो हो कि लज्जा एवं भयको भाव आफ्नो स्थानमा अत्यन्त प्रशंसनीय छ तथा यसमा यति अधिकता पनि उचित छैन । यसकारण कि जुन अल्लाहको भयले उनीहरू यस्तो गर्दछन्, त्यसवाट त तैपनि लुक्न सक्दैनन्, तसर्थ यसप्रकारको कष्टको के लाभ ?

وَمَا مِن دَآبَّةٍ فِي الْأَرْضِ إِلَّا عَلَى اللَّهِ رِزْقُهَا وَيَعْلَمُ مُسْتَقَرَّهَا وَمُسْتَوْدَعَهَا ۚ كُلٌّ فِي كِتَابٍ مُّبِينٍ ⑥

(६) धर्तीमा हिंड्डुल गर्ने जति पनि जीवधारी छन्, सबैको जीविका अल्लाह तआलाको जिम्मामा छ[1] त्यही उनीहरूको बस्ने ठाउँ पनि जान्दछ तथा उनलाई अर्पित गरिने स्थान[2] पनि, सबैथोक खुल्ला किताबमा विद्यमान छ।

وَهُوَ الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ فِي سِتَّةِ أَيَّامٍ وَكَانَ عَرْشُهُ عَلَى الْمَاءِ لِيَبْلُوَكُمْ أَيُّكُمْ أَحْسَنُ عَمَلًا ۗ وَلَئِن قُلْتَ إِنَّكُم مَّبْعُوثُونَ مِن بَعْدِ الْمَوْتِ

(७) तथा अल्लाह नै त्यो हो जसले छः दिनमा आकाशहरू तथा धर्तीलाई उत्पन्न गऱ्यो तथा त्यसको अर्श (सिंहासन) पानीमाथि थियो,[3] ताकि त्यसले तिम्रो परीक्षा लिन सकोस् कि तिमीमा राम्रो कर्म गर्ने को छ ?[4] यदि तपाईं उनीहरूसित भन्नुहुन्छ कि

[1]अर्थात् त्यो प्रभारी तथा उत्तरदायी छ। धर्तीमा हिंड्ने प्रत्येक जीव मानव होस् अथवा जिन्न, पशु होस् अथवा पंक्षी, सानो होस् अथवा ठूलो, जलीय होस् अथवा थलीय, प्रत्येकका लागि उसको श्रेणी तथा जातिको आवश्यकता अनुसार त्यसले भोजनको प्रवन्ध गर्दछ।

[2](مستقر) तथा (مستودع) को भावार्थमा मतभेद छ। केही ज्ञाताहरूका निकट त्यो स्थान जहाँ हिंड्डुल गरेर पुगेपछि रोकियोस् (مستقر) (मुस्तकर) भन्दछन् तथा जसलाई स्थायी निवास वनाउँछ, त्यो (مستودع) हो। अन्य केही विद्वानहरूका निकट माताको गर्भाशय (मुस्तकर) तथा पिताको पिठ्यूँ (मस्तौदआ) हो तथा केहीका निकट जीवनकालमा मानव तथा पशु जहाँ निवास गर्दछन्, त्यो (मूस्तौदआ) हो (तफ़सीर इब्ने कसीर) इमाम शौकानी भन्नुहुन्छ "मुस्तकर" को तात्पर्य माताको गर्भाशय तथा "मुस्तौदआ" सित धर्तीको त्यो भाग हो जसमा त्यो गाडिएको होस् तथा इमाम हाकिमको एक कथनानुसार यसैलाई प्रथमिकता दिइएको छ। अन्ततः जे-पनि अर्थ लगाइयोस्, आयतको भावार्थ स्पष्ट छ कि अल्लाह तआ़लालाई प्रत्येकको (मुस्तकर) तथा (मस्तौदआ) को ज्ञान छ, यसकारण त्यो प्रत्येकलाई भोजन पुऱ्याउनुको सामर्थ्य राख्दछ तथा जिम्मेदार छ, तथा त्यसले आफ्नो कर्तव्य पूरा गर्दछ।

[3]यही कुरो सहीह हदीसवाट पनि सिद्ध हुन्छ। अतः एक हदीसमा वर्णन छ "अल्लाह तआ़लाले आकाश तथा धर्तीको उत्पत्ति भन्दा पचास हजार वर्ष पूर्व जीवहरूको भाग्य लेख्यो, त्यस समय उसको अर्श पानीमाथि थियो।" (सहीह बुख़ारी मुस्लिम, किताबुल कद्र, अन्य हेर्नुस् सहीह बुख़ारी, बदउल ख़ल्क)

[4]अर्थात् यी आकाश तथा धर्ती त्यसै व्यर्थ बिना उद्देश्य बनाएका होइनन्, बरू त्यसको उद्देश्य मानव तथा दानवको परीक्षा लिनु हो कि को राम्रो कर्म गर्दछ ?

لَيَقُولَنَّ الَّذِينَ كَفَرُوا إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُبِينٌ ⑦

तिमीहरू मरे पश्चात फेरि जीवित पारिनेछौ, त काफ़िरले (अधर्मी) उत्तर दिनेछन् कि यो त मात्र खुल्ला रुपमा जादू नै हो ।

وَلَئِنْ أَخَّرْنَا عَنْهُمُ الْعَذَابَ إِلَىٰ أُمَّةٍ مَعْدُودَةٍ لَيَقُولُنَّ مَا يَحْبِسُهُ ۗ أَلَا يَوْمَ يَأْتِيهِمْ لَيْسَ مَصْرُوفًا عَنْهُمْ وَحَاقَ بِهِمْ مَا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ⑧

(८) तथा यदि हामी उनीहरूबाट यातनालाई केही अवधिका लागि निलम्बित गरिदिन्छौं भने यिनीहरू अवश्य भन्नथाल्ने छन् कि यातनालाई कुन चाहिं कुरोले रोकेको छ । सुन ! जुन दिन त्यो उनीहरूको निकट आइपुग्छ, त त्यसपछि उनीबाट हट्नेवाला छैन, अनि त जुन कुराको उपहास गरिराखेका थिए, त्यो तिनीहरूलाई आइ घेर्नेछ ।[1]

وَلَئِنْ أَذَقْنَا الْإِنْسَانَ مِنَّا رَحْمَةً ثُمَّ نَزَعْنَاهَا مِنْهُ ۚ إِنَّهُ لَيَئُوسٌ كَفُورٌ ⑨

(९) तथा यदि हामीले त्यसलाई (मानव) कुनै सुख को रसास्वादन गराए पश्चात पुनः त्यसलाई त्यसबाट खोस्छौं भने अत्याधिक निराश तथा अत्याधिक कृतघ्न हुन्छ ।

وَلَئِنْ أَذَقْنَاهُ نَعْمَاءَ بَعْدَ ضَرَّاءَ مَسَّتْهُ لَيَقُولَنَّ ذَهَبَ السَّيِّئَاتُ

(१०) तथा यदि हामीले त्यसलाई कुनै सुख पुऱ्याउँछौं, त्यस कठिनाईका पश्चात जुन उसलाई पुगेको थियो, त त्यो भन्नथाल्छ कि नराम्रा कुराहरू

**टिप्पणी :** अल्लाह तआलाले यहाँ यो भनेको छैन कि को अधिक कर्म गर्दछ बरू भन्यो कि को अधिक राम्रो कर्म गर्दछ यसकारण कि राम्रो कर्म त्यही हुन्छ, जुन अल्लाहको प्रसन्नताको लागि गरिन्छ तथा अर्को कुरो सुन्नत अनुसार हुन्छ । यी दुवै प्रतिवन्धहरूमध्ये एउटा पनि रहँदैन भने त्यो राम्रो कर्म रहने छैन, अनि त्यो चाहे जति अधिक किन नहोस्, अल्लाहकहाँ त्यसको कुनै मुल्य छैन ।

[1]यहाँ शीघ्र माँग गर्नलाई "उपहास" भनिएको छ किनभने त्यो शीघ्रताको माँग उपहासकै लागि नै हुन्थ्यो । अतः उद्देश्य यो बुझ्नु छ कि अल्लाह (तआला) को तर्फबाट विलम्वमा मनुष्य असावधान रहनु हुँदैन, त्यसको पकड कुनै पनि समय हुनसक्छ ।

[2]मनुष्य जातिमा सामान्यतः जुन दुर्गुण पाईन्छन्, यसमा तथा आउने आयतमा उनको वर्णन छ । निराशाको सम्वन्ध भविष्यसित छ तथा कृतघ्नताको भूत तथा वर्तमानसँग ।

عَنِّيْ ؕ اِنَّهٗ لَفَرِحٌ فَخُوْرٌ ۙ﴿۱۰﴾

म बाट टाढा गइहाले,[1] निःसन्देह त्यो साह्रै नै प्रसन्न भई घमण्ड गर्नथाल्छ ।[2]

اِلَّا الَّذِيْنَ صَبَرُوْا وَعَمِلُوا الصّٰلِحٰتِ ؕ اُولٰٓئِكَ لَهُمْ مَّغْفِرَةٌ وَّ اَجْرٌ كَبِيْرٌ ﴿۱۱﴾

(११) उनीहरूबाहेक जो धैर्य गर्दछन् तथा पुण्य कार्यहरूमा लागिरहन्छन्, तिनीहरूको लागि क्षमा पनि छ तथा अत्यन्त ठूलो प्रतिदान पनि ।[3]

[1]अर्थात् ठान्दछ कि कठिनाईहरूको काल समाप्त भइसकेको छ, अब उसलाई कुनै कठिनाई आउने छैन । समुदायका विभिन्न भावार्थ : आयत संख्या ८ मा "उत्तम" शब्द आएको छ । यो कुरआन मजीदमा विभिन्न स्थानहरूमा विभिन्न अर्थहरूमा प्रयोग भएको छ । أمة शब्द أم बाट बनेको छ, जसको अर्थ हो निश्चय गर्नु । यहाँ यसको अर्थ 'त्यसबखत' तथा अवधिसँग छ, जुन यातनाको लागि निश्चित छ । (फ़तहुल क़दीर) सूरः यूसुफ़को आयत संख्या ४५ ﴿وَادَّكَرَ بَعْدَ اُمَّةٍ﴾ मा पनि यही अर्थ छ । यसको अतिरिक्त जुन अर्थहरूमा यसको प्रयोग भएको छ, तिनीहरूमा एउटा इमाम तथा अगुवा हो । जस्तै ﴿اِنَّ اِبْرٰهِيْمَ كَانَ اُمَّةً﴾ (अन्नहल-१२०) नियम तथा धर्म हो, जस्तै ﴿اِنَّا وَجَدْنَآ اٰبَآءَنَا عَلٰٓى اُمَّةٍ﴾ (अल-जुख़रूफ़-२३) पार्टी तथा गुट हो जस्तै ﴿وَلَمَّا وَرَدَ مَآءَ مَدْيَنَ وَجَدَ عَلَيْهِ اُمَّةً مِّنَ النَّاسِ﴾ (सूरःअल-कसस-२३) ﴿وَمِنْ قَوْمِ مُوْسٰٓى اُمَّةٌ﴾ (सूरः अल-आराफ-१५९) आदि । त्यो विशेष समुदाय तथा सम्प्रदाय हो जसतर्फ कुनै रसूल पठाइएको होस् । ﴿وَلِكُلِّ اُمَّةٍ رَّسُوْلٌ﴾ (सूरः यूनुस-४७) यसलाई आमन्त्रित समुदाय पनि भन्दछन्, तथा त्यसैप्रकार पैग़म्बरमाथि ईमान कायम गर्नेहरूलाई उम्मत (समुदाय) अथवा अनुयायी (समुदाय) अथवा आज्ञाकारी समुदाय भनिन्छ । (इब्ने कसीर)

[2]अर्थात् जे-जति उसको पासमा छ, त्यसमाथि घमण्ड गर्दछ तथा अरूहरूलाई गर्व र अहङ्कार देखाउँछ परन्तु यी दुर्गुणहरूबाट ईमान भएका तथा पुनीत मानिसहरू अलग्ग छन्, जस्तो कि आउने आयतबाट स्पष्ट छ, अर्थात् ईमान भएकाहरूलाई सुख-सुविधा होस् अथवा अभाव तथा दुख दुवै अवस्थाहरूमा अल्लाहका आदेशहरूका अधीन काम गर्दछन् । जस्तो कि हदीसमा चर्चित छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले सौगन्ध खाएर भन्नुभयो, "सौगन्ध छ त्यस अस्तित्वको जसको नियन्त्रणमा मेरो प्राण छ, अल्लाह तआला निष्ठावानहरूका लागि जे पनि निर्णय गर्दछ, त्यसमा उसको लागि भलाईको पक्ष हुन्छ । यदि उसलाई सुख प्राप्त हुन्छ भने त्यो अल्लाहको कृतज्ञ हुन्छ जुन उसको लागि राम्रो हो । (अर्थात् प्रतिफलको कारण) हो तथा यदि कुनै दुख पुग्दछ भने धैर्य राख्दछ, त्यो पनि उसको लागि राम्रो (अर्थात् प्रतिफल तथा पुण्यको कारण) हो । यो विशेषता एउटा निष्ठावानका अतिरिक्त कसैलाई प्राप्त छैन ।"(सहीह मुस्लिम किताबुल जोहद, बाबुल मोमिन अमरुहु कुल्लुहु खैर) तथा एक अन्य हदीसमा भन्नुभयो :

(१२) तसर्थ संभवतः तपाईं त्यस वह्यी (प्रकाशना) को कुनै भागलाई छोडिदिनु हुनेछ, जुन तपाईंतिर अवतरित गरिन्छ तथा त्यसबाट तपाईंको हृदय संकुचित छ, मात्र उनीहरूको यस कुरामा कि यसमाथि कुनै कोष किन अवतरित भएन ? अथवा यसको साथमा कुनै फरिश्ता नै आउँथ्यौ सुनिहाल्नुस् । तपाईं त केवल सचेत गराउने हुनुहुन्छ ।[1] तथा प्रत्येक कुराको संरक्षक मात्र अल्लाह तआ़ला हो ।

فَلَعَلَّكَ تَارِكٌۢ بَعْضَ مَا يُوْحٰٓى اِلَيْكَ وَضَآئِقٌۢ بِهٖ صَدْرُكَ اَنْ يَّقُوْلُوْا لَوْلَآ اُنْزِلَ عَلَيْهِ كَنْزٌ اَوْ جَآءَ مَعَهٗ مَلَكٌ ؕ اِنَّمَآ اَنْتَ نَذِيْرٌ ؕ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ وَّكِيْلٌ ؕ﴿١٢﴾

(१३) के यिनीहरू भन्दछन् कि यस कुर्आनलाई उसैले रचेको छ । जवाफमा भन्नुहोस् कि त्यसो भए तिमी पनि यसैको समान दस सूरः रचेर ल्याऊ ।

اَمْ يَقُوْلُوْنَ افْتَرٰىهُ ؕ قُلْ فَاْتُوْا بِعَشْرِ سُوَرٍ مِّثْلِهٖ مُفْتَرَيٰتٍ وَّ ادْعُوْا

"मोमिनलाई जे पनि दुख-दर्द तथा कठिनाई पुग्दछ, यहाँसम्मकि त्यसलाई काँडा बिज्छ, त अल्लाह तआ़ला त्यसको कारण त्यसका त्रुटिहरूलाई क्षमा गरिदिन्छ ।" (मुसनद अहमद भाग ३, पृष्ठ ४) सूरः मआरिज़का आयतहरू संख्या १९ तथा २२ मा पनि यस विषयको वर्णन छ ।

[1]मूर्तिपूजक नबी सल्लल्लाहु अलैहि वसल्लमको बारेमा भन्ने गर्थे कि उसको साथमा कुनै फरिश्ता किन अवतरित हुँदैन, अथवा उसतिर कुनै कोष किन पठाइँदैन ? (सूरः अल-फुरक़ान-८) एउटा अन्य स्थानमा भनिएको छ "हामीलाई ज्ञान छ कि यिनीहरू तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) को विषयमा जुन कुरा भन्दछन्, त्यसबाट तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) दुखी हुनुहुन्छ ।" (सूरः अल-हिज्र-९८) यस आयतमा तिनै कुराबारे भनिंदैछ कि शायद तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) दुखी हुनुहुन्छ, सम्भव छ तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) त्यो उनीहरूलाई सुनाउन अप्रिय ठान्नुहुन्छ । परन्तु तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) यी कुराहरूबाट निश्चित भई, उनीहरूलाई अल्लाहको वह्यी (प्रकाशना) सुनाउनुहोस्, उनीहरूलाई प्रिय होस् अथवा अप्रिय उनीहरू स्वीकार गर्दछन् अथवा अस्वीकार । तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) को कर्तब्य केवल सतर्क गर्नु तथा चेतावनी हो, त्यो तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) प्रत्येक अवस्थामा गर्दै जानुस् ।

مَنِ اسْتَطَعْتُم مِّن دُونِ اللَّهِ إِن كُنتُمْ صَادِقِينَ ﴿١٣﴾

तथा अल्लाहका अतिरिक्त जसलाई चाहन्छौ, आफूसँग सम्मिलित पनि गरिहाल यदि तिमी साँचो हौ ।[1]

فَإِلَّمْ يَسْتَجِيبُوا لَكُمْ فَاعْلَمُوا أَنَّمَا أُنزِلَ بِعِلْمِ اللَّهِ وَأَن لَّا إِلَٰهَ إِلَّا هُوَ ۖ فَهَلْ أَنتُم مُّسْلِمُونَ ﴿١٤﴾

(१४) अनि यदि उनीहरू तिम्रो यस कुरालाई स्वीकार गर्दैनन् भने तिमी निश्चित रुपले जानीहाल कि यो कुरआन अल्लाहको ज्ञानका साथ अवतरित गरिएको छ । तथा यो कि अल्लाहका अतिरिक्त कोही पूज्य-प्रभु छैन । त के अब तिमी मुसलमान हुन्छौ ?[2]

مَن كَانَ يُرِيدُ الْحَيَاةَ الدُّنْيَا وَزِينَتَهَا نُوَفِّ إِلَيْهِمْ أَعْمَالَهُمْ

(१५) जुन मानिस सांसारिक जीवन तथा त्यसको शोभाका लागि लालायित हुन्छ हामीले यस्तालाई उनका

---

[1]इमाम इब्ने कसीर लेख्नुहुन्छ कि पहिला अल्लाह तआलाले चुनौती दियो कि यदि तिमी यस दावीमा साँचो हौ कि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) द्वारा रचिएको कुरआन हो, त यसको समान प्रस्तुत गरेर देखाऊ तथा तिमी जसको सहायता चाहन्छौ प्राप्त गर, तर तिमी कहिल्यै पनि यस्तो गर्नसक्ने छैनौ । अल्लाहको आदेश भयो :

﴿قُل لَّئِنِ اجْتَمَعَتِ الْإِنسُ وَالْجِنُّ عَلَىٰ أَن يَأْتُوا بِمِثْلِ هَٰذَا الْقُرْآنِ لَا يَأْتُونَ بِمِثْلِهِ وَلَوْ كَانَ بَعْضُهُمْ لِبَعْضٍ ظَهِيرًا﴾

"भनिदिनुस् ! यदि सम्पूर्ण मानव तथा दानव मिलेर यस्तो कुरआन ल्याउन खोज्दछन् भने यसको समान ल्याउन सक्ने छैनन् यद्यपि उनीहरू परस्परमा सहायक बन्छन् ।" (सूरः बनी इस्राईल-८८)

यसपश्चात अल्लाह तआलाले यो चुनौती दियो कि पूरा कुरआन बनाएर प्रस्तुत गर्न सक्दैनौ भने दस सूरः नै बनाएर प्रस्तुत गर । जस्तो कि यस स्थानमा छ । अनि तेस्रो स्थानमा चुनौती दियो कि लौ एउटै सूरः बनाएर प्रस्तुत गर जस्तो कि सूरः यूनुसको आयत संख्या ३१ तथा सूरः अल-बकरःको प्रारम्भमा भनिएको छ (तफ़सीर इब्ने कसीर सूरः यूनुस प्रस्तुत आयत अर्न्तगत) तथा यस आधारमा अन्तिम चुनौती यो हुनसक्दछ कि यो जस्तो एउटा कुरो बनाएर प्रस्तुत गर । ﴿فَلْيَأْتُوا بِحَدِيثٍ مِّثْلِهِ إِن كَانُوا صَادِقِينَ﴾ (सूरः अल-तूर-३४) परन्तु आयतहरूको अवतरणका कर्म चुनौतिका यस क्रमलाई समर्थन दिदैन । (والله أعلم بالصواب)

[2]अर्थात् के यस पश्चात पनि तिमी यस चुनौतीको उत्तर दिनामा असमर्थ छौ, यो मान्नको लागि कि यो कुरआन अल्लाहबाटै अवतरित भएको हो, तयार छैनौ तथा न मुसलमान हुनका लागि तयार छौ ?

فِيهَا وَهُمْ فِيهَا لَا يُبْخَسُونَ ⑮

सबै कर्म (का प्रतिफल) यहीं पूर्णरूपमा पुऱ्याइदिन्छौं तथा यहाँ उनीहरूलाई कुनै कमी गरिदैन ।

أُولَٰئِكَ الَّذِينَ لَيْسَ لَهُمْ فِي الْآخِرَةِ إِلَّا النَّارُ ۖ وَحَبِطَ مَا صَنَعُوا فِيهَا وَبَاطِلٌ مَّا كَانُوا يَعْمَلُونَ ⑯

(१६) हो, यिनै ती मानिसहरू हुन्, जसका लागि परलोकमा आगोका अतिरिक्त केही छैन तथा जे-जति उनीहरूले यहाँ गरेका होलान्, त्यहाँ सबै व्यर्थ छ तथा जे-जति उनका कर्म थिए, ती सबै नाश हुने भएका छन् ।[1]

أَفَمَن كَانَ عَلَىٰ بَيِّنَةٍ مِّن رَّبِّهِ وَيَتْلُوهُ شَاهِدٌ مِّنْهُ وَمِن قَبْلِهِ كِتَابُ مُوسَىٰ إِمَامًا وَرَحْمَةً ۚ أُولَٰئِكَ يُؤْمِنُونَ بِهِ ۚ وَمَن يَكْفُرْ بِهِ

(१७) त्यो व्यक्ति जो आफ्नो पालनकर्ताको तर्फबाट एउटा तर्कमा छ तथा उसँग अल्लाहको तर्फबाट साक्षी छ तथा उसभन्दा पूर्व मूसाको किताब जुन पथ-प्रदर्शक तथा दया छ (साक्षी छ) अरुहरू समान हुनसक्छ ?)[2] यिनै

[1]यी दुई आयतहरूको विषयमा केही ज्ञाताहरूको विचार छ कि यसमा पाखण्डी मानिसहरूको चर्चा छ, केहीका निकट यसबाट तात्पर्य यहूदी तथा इसाई हुन् तथा केहीका निकट यसमा संसारका अभिलाषी मानिसहरूको वर्णन छ, किनभने अवसरवादी पनि जो असल कर्म गर्दछन्, अल्लाह तआ़ला उनको प्रतिफल उनीहरूलाई संसारमै दिदिन्छ, आख़िरतमा उनका लागि दण्डबाहेक केही हुनेछैन । यस विषयलाई कुरआ़न मजीदमा सूर: बनी इस्राईल आयत १८ तथा २१ एवं सूर: शूरा आयत २० मा वर्णन गरिएको छ ।

[2]निवर्तिहरू तथा काफ़िरहरूका सापेक्ष स्वभावयुक्त मानिसहरू तथा निष्ठावानहरूको वर्णन गरिदैछ । "आफ्नो प्रभुतिरबाट तर्क" सित तात्पर्य त्यो प्रकृति हो, जसमा अल्लाह तआ़लाले मानवलाई पैदा गऱ्यो तथा त्यो हो एक अल्लाहलाई मान्नु तथा उसैको इबादत (उपासना) जस्तो कि नबी सल्लल्लाहु अलैहि वसल्लमको आदेश छ, "प्रत्येक बच्चा प्रकृतिमा जन्म लिन्छ, तर त्यस पछाडी त्यसका माता-पिता त्यसलाई यहूदी, इसाई अथवा अग्निपूजक बनाइदिन्छन् ।" (सहीह बुख़ारी किताबुल जनायेज तथा सहीह मुस्लिम किताबुल क़द्र) (يتلوه) को अर्थ हो, त्यसको पछाडी अर्थात त्यसको साथमा अल्लाहको तर्फबाट एउटा साक्षी पनि होस् साक्षीसित तात्पर्य कुरआ़न अथवा मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) हुनुहुन्छ, जो त्यस सत्य प्रकृतितिर आमन्त्रित तथा त्यसतिर संकेत गर्नुहुन्छ । तथा यसभन्दा पूर्व मूसाको किताब तौरात जो पथ-प्रदर्शक थियो तथा कृपाको कारण पनि थियो ।

مِنَ الْأَحْزَابِ فَالنَّارُ مَوْعِدُهُ ۚ فَلَا تَكُ فِي مِرْيَةٍ مِّنْهُ ۚ إِنَّهُ الْحَقُّ مِن رَّبِّكَ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يُؤْمِنُونَ ﴿١٧﴾

मानिसहरू हुन् जो त्यसमा निष्ठा (ईमान) राख्दछन् ।[1] तथा सबै गुटहरूमध्येबाट जो पनि यसको इन्कार गर्ने छ, त्यसको अन्तिम वाचाको स्थान नरक हो,[2] अनि तिमी त्यसमा कुनै प्रकारको सन्देहमा नहोउ, निःसन्देह यो तिम्रो प्रभुको तर्फबाट साक्षात सत्य हो, परन्तु अधिकतर मानिसहरू निष्ठा (ईमान) भएका हुँदैनन् ।[3]

अर्थात् यो मूसाको किताबले पनि कुर्आनमा ईमान कायम गर्न मार्ग देखाउन्छ । अर्थ यो हो कि एक व्यक्ति त्यो हो जो इन्कार गर्दछ तथा काफिर छ तथा त्यसको तुलनामा एउटा अन्य व्यक्ति छ, जो अल्लाहको तर्फबाट आएको तर्कमा स्थिर छ, त्यसमा एउटा साक्षी (कुर्आन अथवा इस्लामका पैगम्बर) पनि छन्, त्यसैप्रकार त्यसभन्दा पूर्व अवतरित भएको किताब तौरातबाट पनि त्यसको लागि मार्गदर्शनको प्रबन्ध छ तथा त्यसले निष्ठा स्थापित गर्दछ, के यी दुबै व्यक्ति समान हुनसक्दछन् ? अर्थात् यी दुबै व्यक्ति समान हुन सक्दैनन् । किनभने एउटा ईमान भएको छ अर्को काफिर । एउटा प्रत्येक प्रकारका प्रमाणहरूले विभूषित छ तथा दोस्रो बिल्कुलै शून्य छ ।

[1]जसमा पूर्वोक्त विशेषताहरू पाइने छन्, तिनीहरू पवित्र कुर्आनमा तथा नबी करीम सल्लल्लाहु अलैहि वसल्लममा ईमान कायम गर्नेछन् ।

[2]सबै गुटहरूसित तात्पर्य सम्पूर्ण धर्तीमा पाइने धर्म हुन्, यहूदी, ईसाई, अग्निपूजक, बौद्धधर्म, मूर्तिपूजक, काफिर तथा अन्य जो पनि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम तथा कुर्आनमा ईमान स्थापित गर्नेछैन, त्यसको निवास नरक हो । यो त्यही विषय हो, जसलाई यस हदीसमा वर्णित गरिएको छ "सौगन्ध छ त्यस अस्तित्वको जसको नियन्त्रणमा मेरो प्राण छ, यस समुदायका जुन यहूदी तथा इसाईले पनि मेरो नबूअतको विषयमा सुन्यो तथा म माथि ईमान (विश्वास) कायम गरे, त्यो नरकमा जानेछ ।"(सहीह मुस्लिम, किताबुल ईमान बाब वजूबुल ईमान बिरिसालते नबियेना मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम इला ज़मीइन्नासे) यो विषय यसभन्दा पूर्व सूरः अल-बकरः आयत संख्या ६२ तथा सूरः निसा आयत संख्या १५० तथा १५२ मा पनि चर्चा भइसकेको छ ।

[3]यो त्यही विषय हो जुन कुर्आन मजीदका अनेक स्थानहरूमा वर्णित गरिएको छ ।

﴿ وَمَا أَكْثَرُ النَّاسِ وَلَوْ حَرَصْتَ بِمُؤْمِنِينَ ﴾

"तिम्रो इच्छाका बावजूद अधिकतर मानिसहरूले ईमान ल्याउने छैनन् । (सूरः यूसुफ-१०३)

وَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا ۚ أُولَٰئِكَ يُعْرَضُونَ عَلَىٰ رَبِّهِمْ وَيَقُولُ الْأَشْهَادُ هَٰؤُلَاءِ الَّذِينَ كَذَبُوا عَلَىٰ رَبِّهِمْ ۚ أَلَا لَعْنَةُ اللَّهِ عَلَى الظَّالِمِينَ ﴿١٨﴾

(१८) तथा त्यसभन्दा अधिक अत्याचारी को होला जो अल्लाहमाथि मिथ्या आरोप गर्दछ ।[1] यिनीहरू आफ्ना पालनकर्ताका समक्ष प्रस्तुत गरिने छन् तथा सारा साक्षीहरू भन्नेछन् कि यी ती मानिसहरू हुन् जसले आफ्नो पालनकर्ताबारे असत्य कुरा रचे, सावधान ! अल्लाहको धिक्कार छ अत्याचारीहरूमाथि ।[2]

الَّذِينَ يَصُدُّونَ عَنْ سَبِيلِ اللَّهِ وَيَبْغُونَهَا عِوَجًا وَهُمْ بِالْآخِرَةِ هُمْ كَافِرُونَ ﴿١٩﴾

(१९) जो अल्लाहको बाटोबाट रोक्दछन् तथा त्यसमा त्रुटि खोज्छन्[3] यिनै, त्यस्ता मानिसहरू हुन्, जो परलोकलाई नकार्दछन् ।

أُولَٰئِكَ لَمْ يَكُونُوا مُعْجِزِينَ فِي الْأَرْضِ وَمَا كَانَ لَهُمْ مِنْ دُونِ اللَّهِ مِنْ أَوْلِيَاءَ ۘ يُضَاعَفُ لَهُمُ

(२०) न यिनीहरू संसारमा अल्लाहलाई पराजित गर्न सके तथा न अल्लाहबाहेक उनको कोही समर्थक भयो, उनीहरूका लागि यातना दुईगुना गरिनेछ,

﴿وَلَقَدْ صَدَّقَ عَلَيْهِمْ إِبْلِيسُ ظَنَّهُ فَاتَّبَعُوهُ إِلَّا فَرِيقًا مِنَ الْمُؤْمِنِينَ﴾

"इब्लीसले आफ्नो विचार साँचो पारेर देखायो, ईमान भएका एउटा समूहका अतिरिक्त, सबै उसका अनुयायी बने ।" (सूरः सबा-२०)

[1]अर्थात् जसलाई अल्लाह तआलाले सृष्टिमा उपभोग गर्नुको तथा आख़िरतमा सिफारिश गर्नुको अधिकार दिएको छैन, उनको विषयमा यो भनियोस् कि अल्लाहले उनीहरूलाई यो अधिकार दिएको छ ।

[2]हदीसमा यसको व्याख्या यसप्रकार गरिएको छ कि कयामत (प्रलय) का दिन अल्लाह तआला एउटा निष्ठावानसित त्यसका पापहरूलाई स्वीकार गराउनेछ कि तिमीलाई ज्ञात छ कि तिमीले अमूक पाप गरेका थियौ, अमुक पनि गरेका थियौ, त्यो ईमानवालाले भन्नेछ हो ठीक छ । अल्लाह तआलाले भन्नेछ कि मैले ती पापहरूमाथि संसारमा पनि पर्दा हालेका थिए, जो आज पनि उनीहरूलाई क्षमा गर्दछु । तर अन्य मानिसहरू अथवा काफ़िरहरूको कुरो यस्तो हुनेछ कि उनीहरूलाई साक्षीहरूका समक्ष डाँकिनेछ तथा साक्षी यो साक्ष्य दिनेछन् कि यिनै ती मानिसहरू हुन्, जसले आफ्ना प्रभुबारे झूटा कुरा गढेका थिए । (सहीह बुख़ारी, तफसीर सूरः हूद)

[3]अर्थात् मानिसहरूलाई अल्लाहको बाटोबाट रोक्नका निम्ति त्रुटिहरू खोज्दछन् तथा मानिसहरूलाई त्यसबाट भड्काउन खोज्छन् ।

الْعَذَابُ ۚ مَا كَانُوا يَسْتَطِيعُونَ السَّمْعَ وَمَا كَانُوا يُبْصِرُونَ ﴿٢٠﴾

न यिनीहरू सुन्ने शक्ति राख्दथे तथा न यी देख्दथे नै ।[1]

أُولَٰئِكَ الَّذِينَ خَسِرُوا أَنفُسَهُمْ وَضَلَّ عَنْهُم مَّا كَانُوا يَفْتَرُونَ ﴿٢١﴾

(२१) यिनै हुन् जसले आफ्नो हानि आफैंले गरे तथा जसबाट आफूले रचेको झूट विलीन भएर गयो ।

لَا جَرَمَ أَنَّهُمْ فِي الْآخِرَةِ هُمُ الْأَخْسَرُونَ ﴿٢٢﴾

(२२) निःसन्देह यी मानिसहरू नै आख़िरत (परलोक) मा क्षतिग्रस्त हुनेछन् ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ وَأَخْبَتُوا إِلَىٰ رَبِّهِمْ أُولَٰئِكَ أَصْحَابُ الْجَنَّةِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٢٣﴾

(२३) निःसन्देह जुन व्यक्तिहरूले निष्ठा (ईमान) स्थापित गरे तथा उनीहरूले काम पनि पुण्यका गरे तथा आफ्नो पालनकर्तातिर नतमस्तक भइरहे, तिनीहरू स्वर्गमा जाने हुन्, जहाँ उनीहरू सधैं बास गर्नेछन् ।

مَثَلُ الْفَرِيقَيْنِ كَالْأَعْمَىٰ وَالْأَصَمِّ وَالْبَصِيرِ وَالسَّمِيعِ ۚ هَلْ

(२४) यी दुबै गुटहरू (समूह) को उदाहरण अन्धा-बहिरा तथा देख्ने-सुन्नेहरूको जस्तो छ ।[2] के यिनी

[1]अर्थात् उनको सत्यबाट विमुख हुनु तथा द्वेष त्यस चरम सीमासम्म पुगेको थियो कि यिनीहरू त्यसलाई देख्ने तथा सुन्ने शक्ति राख्दैनथे । अथवा यो अर्थ हो कि अल्लाहले उनलाई कान तथा आँखा त दिएको थियो तर उनीहरूले तिमीबाट सत्य कुरा न सुने, न देखे । अर्थात्

﴿فَمَآ أَغْنَىٰ سَمْعُهُمْ وَلَآ أَبْصَٰرُهُمْ وَلَآ أَفْـِٔدَتُهُم مِّن شَىْءٍ﴾

"न उनका कानहरूले उनीहरूलाई कुनै लाभ पुऱ्याए न उनका आँखा तथा हृदयले किनभने सत्य सुन्नुबाट वहिरा तथा सत्य देख्नुबाट अन्धा बनिरहे ।" (सूरः अल-अहक़ाफ-२६)

जुनप्रकार कि उनीहरू नरकमा प्रवेश गर्दा भन्नेछन् ।

﴿لَوْ كُنَّا نَسْمَعُ أَوْ نَعْقِلُ مَا كُنَّا فِىٓ أَصْحَٰبِ ٱلسَّعِيرِ﴾

"यदि हामीले सुनेको भए तथा विवेकले काम लिएको भए त आज नरकमा जाने थिएनौं ।" (सूरः अल-मुल्क-१०)

[2]पूर्वका आयतहरूमा निष्ठावान, काफ़िर तथा भाग्यवान् एवं अभागीहरू दुबैको वर्णन गरिएको छ । अब यसमा दुवैको अवस्थाको वर्णन गरेर दुवैको वास्तविकतालाई स्पष्ट गरिदैछ । भनियो एउटाको उदाहरण अन्धा तथा वहिराको सरह छ तथा अर्काको

يَسْتَوِيٰنِ مَثَلًا ۚ أَفَلَا تَذَكَّرُونَ ۝٢٤

दुबै तुलनामा समान छन् ? के तैपनि तिमीले शिक्षा प्राप्त गर्दैनौं ?

وَلَقَدْ أَرْسَلْنَا نُوحًا إِلَىٰ قَوْمِهِۦٓ إِنِّى لَكُمْ نَذِيرٌ مُّبِينٌ ۝٢٥

(२५) तथा निःसन्देह हामीले नूह (अलैहिस्सलाम) लाई त्यसको समुदायतिर रसूल (सन्देशवाहक) बनाएर पठायौं कि म तिमीलाई स्पष्टरूपले सचेत गर्ने हूँ ।

أَن لَّا تَعْبُدُوٓا۟ إِلَّا ٱللَّهَ ۖ إِنِّىٓ أَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ أَلِيمٍ ۝٢٦

(२६) कि तिमी मात्र अल्लाहको पूजा गर्ने गर,[1] मलाई त तिमीमाथि दुखदायी दिन

---

तुलना देख्ने तथा सुन्ने व्यक्ति सरह छ । काफिर संसारमा सत्यको सौन्दर्य हेर्नवाट बञ्चित तथा आखिरत (परलोक) मा मोक्षको मार्गवाट टाढा, त्यसैप्रकार सत्यको तर्क सुन्नबाट बञ्चित रहन्छ, यसैले यस्ता कुरावाट बञ्चित रहन्छ, जुन त्यसका लागि लाभकारी हुन्छन् । यसका विपरीत ईमानवाला, समभ्रुदार, सत्यदर्शी तथा असत्यका मध्य विवेककारी हुन्छन् । अतः तिनी सत्य तथा पुण्यको अनुसरण गर्छन्, तर्कलाइ सुन्दछन् तथा त्यसबाट शंकाको निवारण गर्दछन् तथा असत्यवाट टाढा रहन्छन् । के यी दुबै समान हुनसक्छन् ? प्रश्न नकार्नको लागि हो अर्थात् दुबै समान हुन सक्दैनन् जस्तो अन्य स्थानमा भनिएको छ :

﴿لَا يَسْتَوِىٓ أَصْحَٰبُ ٱلنَّارِ وَأَصْحَٰبُ ٱلْجَنَّةِ ۚ أَصْحَٰبُ ٱلْجَنَّةِ هُمُ ٱلْفَآئِزُونَ﴾

"स्वर्गबासी तथा नर्कवासी समान हुनसक्दैन, स्वर्गमा जाने सफल हुनेहरू हुन् ।" (सूरः अल-हश्र-२०)

एउटा अन्य स्थानमा यसलाई यसप्रकार वर्णित गरिएको छ,

"अन्धा तथा आँखा भएका समान छैनन् । अन्धकार तथा प्रकाश, छायाँ तथा घाम समान छैनन् ।" (सूरः फातिर-१९ देखि २२)

[1]यो त्यही एकेश्वरवादको आमन्त्रण हो जुन प्रत्येक नबीले आएर आ-आफ्ना समुदायलाई दिए । जसप्रकार कुरआनको भनाई छः

﴿وَمَآ أَرْسَلْنَا مِن قَبْلِكَ مِن رَّسُولٍ إِلَّا نُوحِىٓ إِلَيْهِ أَنَّهُۥ لَآ إِلَٰهَ إِلَّآ أَنَا۠ فَٱعْبُدُونِ﴾

"जुन पैग़म्बर हामीले तपाईंभन्दा पूर्व पठायौं, उनीहरूतिर वह्यी (प्रकाशना) गऱ्यौं कि मेरो अतिरिक्त कोही पूज्य छैन, तसर्थ मेरै पूजा गर ।" (सूरः अल-अम्बिया-२५)

को यातनाको भय छ ।[1]

(२७) त्यसका समुदायका काफ़िरहरूका मुखियाहरूले उत्तर दिए कि हामी त तिमीलाई आफु जस्तै मनुष्य नै देख्दछौं,[2] तथा तिम्रा अनुयायीलाई पनि देख्दछौं कि स्पष्टरूपले नीच[3] मानिसहरूबाहेक[4] अन्य कोही छैनन् (जो तिम्रो अनुसरण गरिराखेका छन्)

فَقَالَ الْمَلَأُ الَّذِينَ كَفَرُوا مِن قَوْمِهِ مَا نَرَاكَ إِلَّا بَشَرًا مِّثْلَنَا وَمَا نَرَاكَ اتَّبَعَكَ إِلَّا الَّذِينَ هُمْ أَرَاذِلُنَا بَادِيَ الرَّأْيِ

[1]अर्थात् यदि म माथि बिश्वास ल्याएनौ तथा त्यस एकेश्वरवादको आमन्त्रणलाई स्वीकार गरेनौं भने अल्लाहको यातनाबाट बच्ने छैनौं ।

[2]यो त्यही सन्देह हो जसको व्याख्या कैयन् स्थानहरूमा गरिसकिएको छ कि काफ़िरहरूका निकट मानवतासित नबूअत तथा रिसालतको संयोग वडो विचित्र थियो, जसरी अचेल धार्मिक आधुनिकीकरण गर्नेहरूलाई पनि विचित्र लाग्दछ तथा उनीहरू (रसूल सल्लल्लाहु अलैहि वसल्लम) मानव हुने कुरोबाट इन्कार गर्दछन् ।

[3]सत्यको इतिहासमा यो कुरा पनि प्रत्येक कालमा अगाडी आइरहेको छ कि प्रारम्भमा यसलाई अपनाउनेहरू सधैं ती मानिसहरू हुन्छन् जसलाई समाजमा हीन तथा निर्वल ठानिन्थ्यो तथा धनवान तथा वैभवशाली समूह यसवाट वञ्चित रहन्थ्यो । यहाँसम्मकि यो कुरा पैग़म्वरहरूका अनुयायीको लक्षण बन्यो । अत: जब रोमको राजा हरक्यूलसले आदरणीय अबू सुफ़ियान (जो अझै ईमान ल्याएका थिएनन्) सित नबी सल्लल्लाहु अलैहि वसल्लमको विषयमा कुरा सोध्यो त ती कुरा मध्ये उनीसित एउटा कुरा यो पनि सोध्यो कि त्यसका अनुयायीहरूमा समाजका सम्मानित व्यक्ति छन् अथवा कमजोर ? त आदरणीय सुफ़ियानले उत्तरमा भने, "कमजोर मानिसहरू" जसमाथि हरक्यूलसले भन्यो "रसूलहरूका अनुयायी यिनै मानिसहरू हुन्छन् ।" (सहीह बुख़ारी हदीस संख्या-७) क़ुर्आन करीममा पनि स्पष्टीकरण गरिएको छ कि सामर्थ्यवान मानिसहरू नै सर्वप्रथम पैग़म्बरहरूलाई झूटा भन्दै आइरहेका छन् (सूर: जुख़रूफ़-२३) तथा यी ईमान भएकाहरूको सांसारिक परिस्थिति थियो जसकारण काफ़िरहरू उनीहरूलाई हीन ठान्दथे, अन्यथा वास्तविकता त यो हो कि सत्यका अनुयायी सम्मानित तथा प्रतिष्ठित छन्, चाहे उनी धन-सम्पत्तिमा कम न होऊन् तथा सत्यलाई स्वीकार गर्ने नीच तथा निरादर हुन् चाहे उनीहरू सांसारिक रूपले धनवान नै किन नहोऊन् ।

[4]ईमान भएकाले अल्लाह तथा रसूलका आदेशहरूका सापेक्ष आफ्ना बुद्धि तथा विचार एवं तर्कको प्रयोग गर्दैनन्, यसकारण असत्यका अनुयायी यो ठान्दछन् कि यी मोटो बुद्धिवाला हुन् कि अल्लाहका रसूलले यिनीहरूलाई जतातिर मोड्न चाहन्छन्, यिनीहरू मोडिन्छन्, जुन कुरोबाट रोक्दछ, रोकिन्छन् । यो पनि निष्ठावानहरूको ठूलो विशेषता हो, बरू ईमानको आवश्यक माग हो । परन्तु काफ़िर तथा असत्यवादीहरूका निकट यो विशेषता पनि 'दोष' हो ।

وَمَا نَرٰى لَكُمْ عَلَيْنَا مِنْ فَضْلٍۭ بَلْ نَظُنُّكُمْ كٰذِبِيْنَ ۝٢٧

हामीले त तिम्रो कुनै प्रकारको श्रेष्ठता आफूमाथि देखिराखेका छैनौं, बरू हामी त तिमीलाई झूटा ठानिराखेका छौं ।

قَالَ يٰقَوْمِ اَرَءَيْتُمْ اِنْ كُنْتُ عَلٰى بَيِّنَةٍ مِّنْ رَّبِّيْ وَاٰتٰىنِيْ رَحْمَةً مِّنْ عِنْدِهٖ فَعُمِّيَتْ عَلَيْكُمْ ؕ اَنُلْزِمُكُمُوْهَا وَاَنْتُمْ لَهَا كٰرِهُوْنَ ۝٢٨

(२८) नूहले भने, हे मेरा समुदायका मानिसहरू! मलाई भन, यदि म आफ्नो प्रभुतिर बाट लक्षण प्राप्त छु तथा त्यसले मलाई आफ्नो तर्फबाट (कुनै उत्तम) कृपा प्रदान गरेको छ,[1] अनि त्यो तिम्रा आँखाले देख्दैनन्,[2] भने त के बलपूर्वक त्यसलाई तिम्रो घाटीमा झुण्ड्याई दिउँ जबकि तिमी त्यसलाई चाहँदैनौ ।[3]

وَيٰقَوْمِ لَاۤ اَسْـَٔلُكُمْ عَلَيْهِ مَالًا ؕ اِنْ اَجْرِيَ اِلَّا عَلَى اللّٰهِ وَمَاۤ اَنَا بِطَارِدِ الَّذِيْنَ اٰمَنُوْا ؕ اِنَّهُمْ مُّلٰقُوْا رَبِّهِمْ وَلٰكِنِّيْۤ اَرٰىكُمْ قَوْمًا تَجْهَلُوْنَ ۝٢٩

(२९) हे मेरा समुदायका मानिसहरू ! म यसको साटो तिमीसित कुनै धन माँग्दिन ।[4] मेरो पारिश्रमिक त मात्र अल्लाहको पासमा छ । न म ईमान भएकाहरूलाई आफ्नो पासबाट टाढा धपाउन सक्छु,[5] उनीहरू आफ्ना प्रभुसित भेट्नु छ, तर म

---

[1](بينة) सित तात्पर्य ईमान तथा विश्वास हो तथा कृपाले नबूअत जसबाट अल्लाह तआलाले नूहलाई विभूषित गरेको थियो ।

[2]अर्थात् तिमी उसलाई देख्नसक्ने भएकाले अन्धो भयो । अतः तिमीले उसको न आदर गर्‍यौ न अपना‍उनको लागि तयार भयौ, बरू त्यसलाई झुट्लाउन तथा खण्डन गर्नमा लाग्यो ।

[3]जब यो कुरो छ त, सत्यको प्रदर्शन तथा कृपा तिम्रो भाग्यमा कुन प्रकार आउन सक्छ ?

[4]ताकि तिम्रो मनमा यो शंका उत्पन्न नहोस् कि यस नबूवतको दावीबाट त्यसको उद्देश्य सांसारिक धन एकत्रित गर्नु हो । म त यो काम मात्र अल्लाहको आदेशबाट तथा त्यसको प्रसन्नताको लागि गरिराखेको छु, त्यसैले मलाई यसको फल दिनेछ ।

[5]यसबाट ज्ञात हुन्छ कि नूह अलैहिस्सलामका समुदायका प्रमुखहरूले पनि समाजमा कमजोर ठानिने ईमानवालाहरूलाई आदरणीय नूहसित आफ्नो सभा अथवा आफ्नो निकटताबाट टाढा गर्नुको माँग गरे होलान, जसरी मक्काका नायकहरूले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित यसप्रकारका माग गरेका थिए, जसमा अल्लाह तआलाले कुरआन करीमका यी आयतहरू उतारेको थियो ।

देख्दछु कि तिमीहरू मूर्खता गरिराखेका छौ ।[1]

وَيٰقَوۡمِ مَنۡ يَّنۡصُرُنِيۡ مِنَ اللّٰهِ اِنۡ طَرَدْتُّهُمۡ‌ؕ اَفَلَا تَذَكَّرُوۡنَ

(३०) तथा हे मेरा समुदायका मानिसहरू ! यदि म निष्ठावानहरूलाई आफ्नो पासबाट धपाई दिन्छु भने अल्लाहको तुलनामा मेरो सहायता को गर्न सक्दछ ।[2] के तिमी अलिकति पनि सोच-विचार गर्दैनौ ?

وَلَاۤ اَقُوۡلُ لَـكُمۡ عِنۡدِىۡ خَزَآئِنُ اللّٰهِ وَلَاۤ اَعۡلَمُ الۡغَيۡبَ وَلَاۤ اَقُوۡلُ اِنِّىۡ مَلَكٌ وَّلَاۤ اَقُوۡلُ لِلَّذِيۡنَ تَزۡدَرِىۡۤ اَعۡيُنُكُمۡ لَنۡ يُّؤۡتِيَهُمُ اللّٰهُ خَيۡرًا‌ ؕ اَللّٰهُ اَعۡلَمُ بِمَا فِىۡۤ اَنۡفُسِهِمۡ‌

(३१) तथा म तिमीसित भन्दिन कि मेरो पासमा अल्लाहका कोष छन्, सुनि हाल म परोक्षको ज्ञान पनि राख्दिन, न म यो भन्दछु कि म फरिश्ता (स्वर्ग दूत) हूँ, न मेरो यो कथन छ कि जसमाथि तिम्रो दृष्टि अपमानले परिराखेछ, तिनीहरूलाई अल्लाह तआलाले कुनै उत्तम वस्तु

---

﴿وَلَا تَطْرُدِ الَّذِينَ يَدْعُونَ رَبَّهُم بِالْغَدَاةِ وَالْعَشِيِّ﴾

“हे पैगम्बर ! ती मानिसहरूलाई आफूभन्दा टाढा नगर्नू जो प्रातः तथा संया आफ्नो प्रभुलाई पुकार्दछन् ।” (सूरः अल-अनाम-५२)

﴿وَاصْبِرْ نَفْسَكَ مَعَ الَّذِينَ يَدْعُونَ رَبَّهُم بِالْغَدَاةِ وَالْعَشِيِّ يُرِيدُونَ وَجْهَهُ ۖ وَلَا تَعْدُ عَيْنَاكَ عَنْهُمْ﴾

“आफूलाई ती मानिसहरूसँग जोडिराख्नुस् जो आफ्ना प्रभुलाई बिहान र वेलुका पुकार्दछन्, आफ्नो प्रभुको प्रसन्नता चाहन्छन्, तपाईंका आँखा उनीवाट हटेर अन्यत्र नजाऊन् ।” (सूरः अल-कहफ-२८)

[1]अर्थात् अल्लाह तथा रसूलका अनुयायीहरूलाई तुच्छ ठान्नु तथा पछि उनीहरूलाई नबीको निकटताबाट टाढा गर्नुको माग गर्नु, यो तिम्रो मूर्खता हो। यी मानिसहरू त यस योग्य छन् कि यिनको निकै आदर गरियोस् न कि टाढाबाट धिक्कारियोस् ।

[2]अर्थात् यस्ता मानिसहरूलाई आफूबाट टाढा गर्नु, अल्लाहको क्रोध तथा अप्रसन्नताको कारण हो ।

दिने नै छैन ।[1] उनीहरूका हृदयमा जे-जति छ, अल्लाह राम्ररी जान्दछः यदि म यस्तो भन्छु भने निःसन्देह मेरो पनि गणना अत्याचारहरूमध्ये हुनेछ ।[2]

إِنِّيٓ إِذًا لَّمِنَ ٱلظَّٰلِمِينَ ۝

(३२) (समुदायका मानिसहरूले) भनेः हे नूह ! तिमी हामीसित झगडा तथा अत्याधिक विवाद गरिसक्यो ।[3] अब त तिमी जुन कुरोबाट हामीलाई तर्साइराखेका छौ, त्यही हाम्रो पासमा ल्याउ, यदि तिमी साँचो हौ ।[4]

قَالُوا۟ يَٰنُوحُ قَدْ جَٰدَلْتَنَا فَأَكْثَرْتَ جِدَٰلَنَا فَأْتِنَا بِمَا تَعِدُنَآ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ۝

(३३) उनले उत्तर दिए कि त्यसलाई पनि अल्लाह (तआ़ला) ले नै ल्याउनेछ यदि त्यो चाहन्छ तथा हो, तिमी त्यसलाई विवश गर्न सक्दैनौं ।[5]

قَالَ إِنَّمَا يَأْتِيكُم بِهِ ٱللَّهُ إِن شَآءَ وَمَآ أَنتُم بِمُعْجِزِينَ ۝

(३४) तिमीलाई मेरो शुभचिन्ता केही पनि लाभ पुऱ्याउन सक्दैन, चाहे म जति पनि

وَلَا يَنفَعُكُمْ نُصْحِيٓ إِنْ أَرَدتُّ أَنْ أَنصَحَ لَكُمْ إِن كَانَ ٱللَّهُ

[1]वरू अल्लाह तआ़लाले त उनीहरूलाई ईमानको रूपमा सर्वश्रेष्ठ पुण्य प्रदान गरेको छ तथा जसको आधारमा उनीहरू आख़िरत (परलोक) मा पनि स्वर्गका सुख-सुविधाहरूका आनन्द लिनेछन् तथा संसारमा पनि यदि अल्लाहले चाहन्छ भने उच्च पद प्रदान गर्नेछ । अर्थात् तिमीले यिनलाई तुच्छ ठान्नु यिनका लागि हानिकारक छैन, तर तिमी नै अल्लाहका समक्ष अपराधी हुनेछौ कि अल्लाहका पुनीत भक्तहरूलाई जसलाई अल्लाहको दरवारमा उच्च स्थान प्राप्त छ, तिमीले नीच तथा अछूत ठान्दछौ ।

[2]किनभने यदि म उनको विषयमा यस्तो कुरा भनूँ जसको मलाई ज्ञान छैन, मात्र अल्लाह जान्दछ त यो अत्याचार हो ।

[3]परन्तु यसका उपरान्त हामीले विश्वास गरेनौं ।

[4]यो त्यही मूर्खता हो, जसलाई विचलित समुदायले गर्दै आएका छन् कि उनीहरू आफ्नो पैग़म्बरसित भन्दै गरे यदि तिमी साँचो हौ भने हामीमाथि प्रकोप अवतरित गरेर हामीलाई नष्ट गराइदेउ । यदि उनीहरूमा बुद्धि भएको भए उनीहरू भन्थे कि यदि तिमी साँचो हौ तथा वास्तवमा अल्लाहका रसूल हौ, भने हाम्रो लागि पनि प्रार्थना गर कि अल्लाह तआ़ला हाम्रा हृदयलाई पनि फुकाई देओस् ताकि हामीले यसलाई अपनाउन सकौं ।

[5]अर्थात् प्रकोप आउनु पूर्णरूपले अल्लाहको इच्छामा आधारित छ, यो होइन कि जब म चाहन्छु तिमीमाथि प्रकोप आइपुग्छ । परन्तु जब अल्लाह प्रकोपको निर्णय गर्नेछ अथवा पठाउनेछ, त त्यसलाई रोक्नेवाला कोही छैन ।

يُرِيْدُ اَنْ يُّغْوِيَكُمْ ؕ هُوَ رَبُّكُمْ ۟ وَاِلَيْهِ تُرْجَعُوْنَ ۟

तिम्रो शुभचिन्तक किन न होउ, यदि अल्लाहको इच्छा तिमीलाई विचलित गर्नुछ ।[१] त्यही तिमी सबैको प्रभु हो[२] तथा उसैतिर फर्कि जानेछौ ।

اَمْ يَقُوْلُوْنَ افْتَرٰىهُ ؕ قُلْ اِنِ افْتَرَيْتُهٗ فَعَلَيَّ اِجْرَامِيْ وَاَنَا بَرِيْٓءٌ مِّمَّا تُجْرِمُوْنَ ۟

(३५) के यिनीहरू भन्दछन् कि त्यसलाई स्वयं उसैले रचेको छ ? त उत्तर देउ कि यदि मैले त्यसलाई रचेको छु भने मेरो पाप म माथि छ, तथा म ती पापहरूबाट अलग्ग छु जन तिमी गरिराखेका छौ ।[३]

وَاُوْحِيَ اِلٰى نُوْحٍ اَنَّهٗ لَنْ يُّؤْمِنَ مِنْ قَوْمِكَ اِلَّا مَنْ قَدْ اٰمَنَ فَلَا

(३६) तथा नूहतिर वह्यी (प्रकाशना) पठाइयो कि तिम्रो समुदायमा जो पनि ईमान

[१](إِغْــواء) शब्द (إضلال) शब्दका अर्थहरूमा प्रयोग भएको छ, जसको अर्थ हो "पथ-विचलित गर्नु"। अर्थात् तिम्रो कुफ्र तथा झुट्लाउने कुरो यदि त्यस स्थानसम्म पुगिसकेको छ, जहाँबाट कुनै व्यक्तिलाई फर्कन तथा प्रकाश प्राप्त गर्न असम्भव छ, तथा त्यसै अवस्थालाई अल्लाह तआलाको तर्फबाट "मोहर लगाइदिनु" भनिन्छ, जसपश्चात मार्गदर्शन प्राप्त गर्ने कुनै आशा शेष रहँदैन । अर्थ यो हो कि यदि तिमी पनि त्यस भयानक घुम्तीसम्म पुगिसकेका छौ भने यदि म तिम्रो भलो गर्न चाहूँ अर्थात् मार्गमा ल्याउन अझै प्रयत्न गरूँ त यो प्रयत्न तथा भलाई तिम्रो लागि लाभकारी हुन सक्तैन, किनभने तिमी विचलनको अन्तिम चरम सीमासम्म पुगिसकेका छौ ।

[२]मार्गदर्शन तथा विचलन पनि उसैको हातमा छ तथा तिमीलाई उसैतिर फर्केर जानुछ, जहाँ त्यसले तिमीलाई तिम्रा कर्महरूको प्रतिफल दिनेछ । पुनीत काम गर्नेहरूलाई प्रतिफल तथा नराम्राहरूलाई नराम्रोको दण्ड दिनेछ ।

[३]केही व्याख्याकारहरूका निकट यो वार्तालाप नूहका समुदायका मानिसहरू तथा आदरणीय नूहका बीच भयो तथा केहीका विचारले यो प्रासंगिक वाक्यको रूपमा नबी अकरम सल्लल्लाहु अलैहि वसल्लम तथा मक्काका मूर्तिपूजकहरूका बीच भएको वार्तालाप हो । अर्थ यो हो कि यदि यो कुरआन मबाट रचेको हो तथा म अल्लाहतिर सम्बन्धित गर्नमा झूटा हूँ, त यो मेरो अपराध हो, यसको दण्ड मैले नै भोग्नेछु । तर तिमी जे गरिराखेका छौ जससित म असम्बन्धित छु, त्यसको पनि तिमीलाई ज्ञान छ ? यसको दुष्परिणाम त ममाथि छैन, तिमीमाथि नै पर्नेछ, त्यसको पनि तिमीलाई केही चिन्ता छ ?

تَبْتَئِسْ بِمَا كَانُوا يَفْعَلُونَ ﴿٣٦﴾

कायम गरिसके, उनीबाहेक अब कोही ईमान स्थापित गर्ने छैन, तसर्थ उनका कर्महरूमाथि दुखी नहोउ ।[1]

وَاصْنَعِ الْفُلْكَ بِأَعْيُنِنَا وَوَحْيِنَا وَلَا تُخَاطِبْنِي فِي الَّذِينَ ظَلَمُوا إِنَّهُم مُّغْرَقُونَ ﴿٣٧﴾

(३७) तथा एउटा डुङ्गा हाम्रा आँखा सामु तथा हाम्रो वह्यी (प्रकाशना) ले तयार गर ।[2] तथा अत्याचारीहरूको विषयमा हामीसित कुनै कुरा नगर, निश्चय नै उनीहरू पानीमा डुबाइने छन् ।[3]

وَيَصْنَعُ الْفُلْكَ وَكُلَّمَا مَرَّ عَلَيْهِ مَلَأٌ مِّن قَوْمِهِ سَخِرُوا مِنْهُ قَالَ إِن تَسْخَرُوا مِنَّا فَإِنَّا

(३८) उनले (नूह) डुङ्गा बनाउन थाले । त्यसका समुदायका जुन पनि गुटका मानिस उसका नजीकबाट गुज्रन्थे उनीहरू त्यसको उपहास गर्दथे ।[4] उनले भन्दथे कि यदि तिमीहरू हाम्रो उपहास गर्दछौ भने

[1]यो त्यसबेला भनियो जब नूहका समुदायले आपदाको माँग गरे तथा आदरणीय नूहले अल्लाहसित प्रार्थना गरे कि हे प्रभु ! धर्तीमा एउटा पनि काफ़िर वस्न नदेउ । अल्लाहले आदेश गऱ्यो : अब अन्य कोही ईमान स्थापित गर्नेछैन, तिमी उनीमाथि दुखी नहोउ ।

[2]"हाम्रा आँखाहरू सामु" को अर्थ हो "हाम्रो रेखदेखमा" तर यो आयत अल्लाह तआलाको लागि आँखा हुनुको गुण वताउँछ, जसमा आस्था अनिवार्य छ । तथा "हाम्रो वह्यी (प्रकाशना) ले" को अर्थ त्यसको लम्बाई, चौडाई आदिको जुन अवस्था हामीले भनेका छौं, त्यसप्रकार त्यसलाई बनाउ । यस स्थानमा केही व्याख्याकारहरूले डुङ्गाको लम्वाई, चौडाई त्यसका तलाहरू तथा कुन प्रकारको काठ तथा अन्य सामान त्यसमा प्रयोग गरियो, त्यसको विस्तृत वर्णन गरेका छन्, जुन स्पष्ट छ कि कुनै प्रमाणितामा आधारित छैन । त्यसको सही विस्तृत ज्ञान मात्र अल्लाहलाई नै छ ।

[3]केहीले यसवाट तात्पर्य आदरणीय नूहका पुत्र तथा पत्नीलाई लिएका छन्, जो निष्ठावान भएनन् तथा डुब्नेहरूमध्येका थिए । केहीले यसबाट डुब्ने सम्पूर्ण समुदायलाई लिएका छन् तथा अर्थ यो हो कि यिनका लागि अवसर दिनुको माँग नगर्नु किनभने अब उनको विनाशको समय आइसकेको छ अथवा यो अर्थ हो कि उनीहरूको विना शका लागि शीघ्रता नगर्नुस्, निर्धारित समयमा यी सबै डुबिहाल्नेछन् । (फ़तहुल क़दीर)

[4]उदाहरणार्थ भन्थे हे नूह ! नबूअत भन्दा-भन्दा अब डकर्मीको काम प्रारम्भ गरिहाल्यौ । अथवा हे नूह ! स्थलमा डुङ्गा केको लागि बनाईराखेका छौ ?

نَسْخَرُ مِنكُمْ كَمَا تَسْخَرُونَ ﴿٣٨﴾

हामी पनि तिमीमाथि एक दिन हाँस्नेछौं जस्तो तिमी उपहास गरिराखेका छौ ।

فَسَوْفَ تَعْلَمُونَ مَن يَأْتِيهِ عَذَابٌ يُخْزِيهِ وَيَحِلُّ عَلَيْهِ عَذَابٌ مُّقِيمٌ ﴿٣٩﴾

(३९) तिमीहरूलाई अति छिटै ज्ञात भइहाल्नेछ कि कसमाथि प्रकोप आउनुछ, जसले त्यसलाई अपमानित गर्दछ तथा त्यसमाथि स्थायी दण्ड[1] अवतरित हुन्छ ।

حَتَّىٰ إِذَا جَاءَ أَمْرُنَا وَفَارَ التَّنُّورُ قُلْنَا احْمِلْ فِيهَا مِن كُلٍّ زَوْجَيْنِ اثْنَيْنِ وَأَهْلَكَ إِلَّا مَن سَبَقَ عَلَيْهِ الْقَوْلُ وَمَنْ آمَنَ

(४०) यहाँसम्मकि जब हाम्रो आदेश आयो तथा पृथ्वीबाट मूलहरू फुट्न थाले,[2] तब, हामीले भन्यौं कि यस डुङ्गामा हर जातिमध्येबाट दुई-दुई जोडा त्यसमा सवार गराइहाल ।[3] तथा आफ्नो घरका मानिसहरूलाई पनि, यस्ता व्यक्तिबाहेक जसको विषयमा निश्चित भइसकेको छ ।[4] तथा

[1]यसबाट तात्पर्य नरकको स्थायी यातना हो, जुन सांसारिक प्रकोपका पश्चात उनको लागि तयार छ ।

[2]यसबाट केही विद्वानहरूले रोटी पकाउने तन्दूर, केहीले निर्धारित स्थान जस्तै ऐनुलवर्द: तथा केहीले धर्तीको सतह लिएका छन् । हाफ़िज इब्ने क़सीरले यसै अन्तिम अर्थलाई प्राथमिकता दिनुभएको छ अर्थात् सम्पूर्ण धर्ती स्रोतहरूको जस्तै उम्लिन थाल्यो, माथिबाट आकाशको वर्षाले शेष रहेको कमीलाई पुरा गरिदियो ।

[3]यसबाट तात्पर्य स्त्री तथा पुरूष अर्थात भाले-पोथी हो । यसप्रकार प्रत्येक जीवधारीको युगल डुङ्गामा राखियो तथा केही ज्ञाताहरूले भन्दछन् कि वनस्पति पनि राखिएको थियो ।

[4]अर्थात् जसलाई डुब्नु अल्लाहद्वारा लेखिएको भाग्यको अनुरूप छ । यसबाट तात्पर्य सामान्य काफ़िर छन् अथवा यिनी नष्ट हुनेहरूमध्ये हुन् अर्थात् आफ्नो घरका मानिसहरूलाई पनि डुङ्गामा सवार गर उनीहरूका अतिरिक्त जसबारे अल्लाहको कुरा स्पष्ट गरिदिएको छ अर्थात् एउटा पुत्र (कन्आन) अथवा (याम) तथा आदरणीय नूहकी पत्नी (वायल:) यी दुबै काफ़िर थिए, यिनलाई डुङ्गामा बसाल्नबाट निषिद्ध गरियो ।

وَمَآ اٰمَنَ مَعَهٗٓ اِلَّا قَلِيْلٌ ۝٤٠

सबै ईमान भएकालाई पनि,[1] त्यससँग निष्ठावान निकै कम थिए ।[2]

وَقَالَ ارْكَبُوْا فِيْهَا بِسْمِ اللّٰهِ مَجْرٖىهَا وَمُرْسٰىهَا ۭ اِنَّ رَبِّيْ لَغَفُوْرٌ رَّحِيْمٌ ۝٤١

(४१) तथा नूहले भने कि यस डुङ्गामा बसिहाल, अल्लाहकै नामबाट यो चल्छ तथा रोकिन्छ,[3] निःसन्देह मेरो पालनकर्ता अत्याधिक क्षमाशील तथा अत्याधिक कृपालु छ ।

وَهِيَ تَجْرِيْ بِهِمْ فِيْ مَوْجٍ كَالْجِبَالِ ۣ وَنَادٰي نُوْحُۨ ابْنَهٗ وَكَانَ فِيْ

(४२) तथा त्यो डुङ्गा उनीहरूलाई पर्वतहरू जस्तै तरङ्गहरूमा लिएर गइराखेको थियो ।[4] तथा नूहले आफ्नो पुत्र

[1]अर्थात् सबै निष्ठावानहरूलाई डुङ्गामा सवार गराइहाल ।

[2]केही ज्ञाताहरूले उनीहरूको संख्या (स्त्री तथा पुरुषसहित) अस्सी तथा केहीले यसभन्दा पनि कम बताएका छन् । यिनीहरूमा आदरणीय नूहका तीन पुत्र जो ईमान स्थापित गर्नेहरूमा थिए, सम्मिलित थिए । साम, हाम, तथा याफ़िस तथा उनका पत्नीहरू तथा चौथो पत्नी यामकी थिई, जो काफ़िर थियो परन्तु त्यसकी पत्नी मुसलमान हुनुको कारण डुङ्गामा सवार थिई ।

[3]अर्थात् अल्लाहकै नामले त्यसको जल सतहमा हिड्नु तथा उसैको नामबाट रोकिनु छ । यसबाट एउटा उद्देश्य ईमान भएकाहरूलाई सान्त्वना तथा साहस दिनु थियो कि कुनै प्रकारको भय रहित अवस्थामा डुङ्गामा सवार होऊ । अल्लाह नै यस डुङ्गाको रक्षक तथा निरीक्षक छ उसैको आदेशबाट डुल्नेछ तथा उसैको आदेशबाट रोकिनेछ । जसरी अल्लाह तआलाले अन्य स्थानमा आदेश गऱ्यो कि हे नूह ! जब तिमी तथा तिम्रा साथी डुङ्गामा आरामसित बसी सक्छौ त भन–

﴿ اَلْحَمْدُ لِلّٰهِ الَّذِيْ نَجّٰىنَا مِنَ الْقَوْمِ الظّٰلِمِيْنَ ☆ وَقُلْ رَّبِّ اَنْزِلْنِيْ مُنْزَلًا مُّبٰرَكًا وَّاَنْتَ خَيْرُ الْمُنْزِلِيْنَ ﴾

"सबै प्रशंसा अल्लाहकै लागि छन् जसले हामीलाई अत्याचारीहरूबाट मोक्ष प्रदान गऱ्यो तथा भन कि हे मेरा प्रभु ! मलाई सुरक्षित उतार्नु, तिमी नै उत्तम उतार्नेवाला हौ ।" (सूरः अल-मोमिनून-२८, २९)

केही आलिमहरूले डुङ्गा तथा सवारीमा बस्दाखेरि بسم الله مجريها ومُرسٰها लाई पढ्नु उचित मानेका छन् । परन्तु हदीसबाट ﴿ سُبْحٰنَ الَّذِيْ سَخَّرَ لَنَا هٰذَا وَمَا كُنَّا لَهٗ مُقْرِنِيْنَ ☆ وَاِنَّآ اِلٰى رَبِّنَا لَمُنْقَلِبُوْنَ ﴾ लाई पढ्नु सिद्ध छ ।

[4]अर्थात् जब धर्तीमा पानी थियो यहाँसम्मकि पर्वत पनि डुबेका थिए, यो डुङ्गा आदरणीय नूह तथा उनका साथीहरूलाई आफूमा सुरक्षित लिएर अल्लाहको आदेशले तथा उसको आफ्नो सुरक्षामा पर्वतको जस्त तैरिराखेको थियो ।

مَعۡزِلٍ يّٰبُنَيَّ ارۡكَبۡ مَّعَنَا وَلَا تَكُنۡ مَّعَ الۡكٰفِرِيۡنَ ۝

सित जो एउटा किनारामा थियो, बोलाएर भने, हे मेरो प्यारो बच्चा ! हामीसँग सवार होउ तथा काफ़िरहरूमा सम्मिलित नहोउ ।[1]

قَالَ سَاٰوِيۡۤ اِلٰى جَبَلٍ يَّعۡصِمُنِىۡ مِنَ الۡمَآءِ ؕ قَالَ لَا عَاصِمَ الۡيَوۡمَ مِنۡ اَمۡرِ اللّٰهِ اِلَّا مَنۡ رَّحِمَ ۚ وَحَالَ بَيۡنَهُمَا الۡمَوۡجُ فَكَانَ مِنَ الۡمُغۡرَقِيۡنَ ۝

(४३) उसले उत्तर दियो कि म त कुनै अग्लो पर्वतको शरणमा आइहाल्नेछु जसले मलाई पानीबाट बचाउनेछ ।[2] नूहले भने आज अल्लाहको आदेशबाट बचाउने कोही छैन, तिनीहरू मात्र बच्नेछन्, जसमाथि अल्लाहको कृपा भयो । त्यतिखेर उनीहरू माझ लहर आइपुग्यो तथा त्यो डुब्नेहरू मध्येबाट भयो ।[3]

وَقِيۡلَ يٰۤاَرۡضُ ابۡلَعِىۡ مَآءَكِ وَيٰسَمَآءُ اَقۡلِعِىۡ وَغِيۡضَ الۡمَآءُ وَقُضِىَ

(४४) तथा आदेश गरियो कि हे धर्ती ! आफ्नो पानीलाई निलिहाल,[4] तथा हे आकाश ! भयो

अन्यथा यति तूफान भएको पानीमा डुङ्गाको के महत्व हुन्छ र यसैकारण अन्य स्थानमा अल्लाह तआ़लाले यसलाई आभारको रूपमा वर्णन गरेको छ ।

﴿ إِنَّا لَمَّا طَغَا الْمَاءُ حَمَلْنَاكُمْ فِي الْجَارِيَةِ ☆ لِنَجْعَلَهَا لَكُمْ تَذْكِرَةً وَتَعِيَهَا أُذُنٌ وَاعِيَةٌ ﴾

"जब पानीमा बाढी आयो त त्यसबेला हामीले तिमीलाई डुङ्गामा चढायौं, ताकि त्यसलाई तिम्रो निम्ति शिक्षाप्रद र स्मरणीय बनाऔं तथा स्मरण राख्ने कान त्यसलाई याद राखून् ।" (सूर: अल-हाक़्क़:-११, १२)

[1]यो आदरणीय नूहको चौथो पुत्र थियो जसको उपाधि 'कन्आन' तथा नाम 'याम' थियो, त्यससित आदरणीय नूहले निवेदन गरे कि मुसलमान होऊ, तथा काफ़िरहरूसित सम्मिलित भएर डुब्नेहरू मध्येका नहोउ ।

[2]उसको विचार थियो कुनै अग्लो पर्वतको शिखरमा चढेर म शरण लिनेछु, त्यहाँ पानी कसरी पुग्छ ?

[3]पिता-पुत्रका मध्ये यो वार्ता भइराखेकै थियो कि एउटा तूफानी धाराले उसलाई आफ्नो चपेटामा लिहाल्यो ।

[4]निल्नुको प्रयोग पशुको लागि हुन्छ कि त्यसले आफ्नो मुखको गाँस निल्छ । यहाँ पानी सुक्नुलाई निल्नुसित तुलना गर्नुमा यस मार्मिकताको ज्ञान हुन्छ कि पानी बिस्तारै सुकेन, बरू अल्लाहको आदेशबाट धर्तीले तत्क्षण आफूभित्र सारा पानी त्यसप्रकार निल्यो जुनप्रकार पशुले गाँस निल्छ ।

الْأَمْرُ وَاسْتَوَتْ عَلَى الْجُودِيِّ وَقِيلَ بُعْدًا لِّلْقَوْمِ الظَّالِمِينَ ﴿٤٤﴾

रोकिइहाल, त्यतिखेरै पानी सुकाइयो तथा कार्य पूर्ण गरियो ।[1] तथा डुङ्गा (नाव) 'जूदी' नामक पर्वत[2] मा गई अड्यो तथा भनियो कि अन्याय गर्नेहरूमाथि धिक्कार अवतरित होस् ।[3]

وَنَادَىٰ نُوحٌ رَّبَّهُ فَقَالَ رَبِّ إِنَّ ابْنِي مِنْ أَهْلِي وَإِنَّ وَعْدَكَ الْحَقُّ وَأَنتَ أَحْكَمُ الْحَاكِمِينَ ﴿٤٥﴾

(४५) तथा नूहले आफ्नो प्रभुलाई पुकारे तथा भने कि हे मेरा प्रभु ! मेरो पुत्र त मेरो परिवार मध्येको हो । निःसन्देह तिम्रो बाचा पूर्णरूपमा सत्य छ तथा तिमी सबै अधिपतिहरूभन्दा श्रेष्ठ अधिपति हौ ।[4]

قَالَ يَا نُوحُ إِنَّهُ لَيْسَ مِنْ أَهْلِكَ ۖ إِنَّهُ عَمَلٌ غَيْرُ صَالِحٍ ۖ فَلَا تَسْأَلْنِ

(४६) (अल्लाह तआलाले) भन्नुभयो हे नूह ! निःसन्देह त्यो तिम्रो परिवार मध्येबाट होइन,[5] त्यसका कर्म बिल्कुलै अप्रिय छन्[6] तिमीले कदापि त्यो

[1]अर्थात् सबै काफ़िरहरूलाई डुबाइयो ।

[2]जूदी पर्वतको नाम हो, जुन केही मानिसहरूका कथनानुसार इराकको नगर मूसलको निकट छ, आदरणीय नूहको समुदाय पनि यसैको निकट आबाद थियो ।

[3](بعد) यो विनाश तथा अल्लाहको धिक्कारको अर्थमा प्रयोग भएको छ तथा कुरआन करीममा विशेषरूपले अल्लाहका क्रोधका कारण बन्ने समुदायहरूका लागि कैयन् स्थानमा प्रयोग भएको छ ।

[4]आदरणीय नूहले संभवत आफ्नो पिता प्रेमको भावनाबाट प्रेरित भएर अल्लाहको दरबारमा प्रार्थना गरे तथा केही व्याख्याकाररू भन्दछन् कि उनलाई यो संभावना थियो कि संभवतः त्यो मुसलमान हुनेछ । यसकारण उसको विषयमा यो प्रार्थना गरे ।

[5]आदरणीय नूहले आफ्नो वंशीय निकटताको कारण त्यसलाई आफ्नो पुत्र भनेका थिए । परन्तु अल्लाह तआलाले ईमानको आधारमा धर्मको निकटताको नियमानुसार यस कुरालाई नकार्नु भयो कि त्यो तिम्रो परिवारमध्येको हो । यसकारण कि एउटा नबीको मूल परिवार त त्यही हो, जो उसमाथि ईमान राख्दछ, चाहे त्यो जोसुकै होस् । तथा यदि ईमान कायम गर्दैं भने चाहे त्यो नबीको पिता होस्, पुत्र होस् अथवा पत्नी, त्यो नबीको परिवारको सदस्य होइन ।

[6]यो अल्लाह तआलाले त्यसको कारणको वर्णन गरेको छ । यसबाट ज्ञात भयो कि जोसित ईमान तथा पुण्य कर्म हुनेछैन, त्यसलाई यातनाबाट अल्लाहको

مَا لَيْسَ لَكَ بِهٖ عِلْمٌ ۭ اِنِّىْٓ اَعِظُكَ اَنْ تَكُوْنَ مِنَ الْجٰهِلِيْنَ ﴿۴۶﴾

कुरो माँग्नुहुन्न जसको तिमीलाई अलिकति पनि ज्ञान छैन[1] म तिमीलाई शिक्षा दिन्छु कि तिमी अशिक्षितहरूमा आफ्नो गणना गराउनुबाट रुकिहाल ।[2]

قَالَ رَبِّ اِنِّىْٓ اَعُوْذُ بِكَ اَنْ اَسْـَٔلَكَ مَا لَيْسَ لِيْ بِهٖ عِلْمٌ ۭ وَاِلَّا تَغْفِرْ لِيْ وَتَرْحَمْنِيْٓ اَكُنْ مِّنَ الْخٰسِرِيْنَ ﴿۴۷﴾

(४७) नूहले भने हे मेरा प्रभु ! म तिम्रै शरण चाहन्छु त्यो कुरा माँग्नबाट जसको मलाई ज्ञान छैन । यदि तिमीले मलाई क्षमा गर्दैनौ तथा ममाथि दया गर्दैनौ भने म हानि ब्यहोर्नेहरूमध्ये हुनेछु ।[3]

قِيْلَ يٰنُوْحُ اهْبِطْ بِسَلٰمٍ مِّنَّا وَبَرَكٰتٍ عَلَيْكَ وَعَلٰٓي اُمَمٍ مِّمَّنْ مَّعَكَ ۭ وَاُمَمٌ سَنُمَتِّعُهُمْ ثُمَّ

(४८) भनियो कि हे नूह ! हाम्रो तर्फबाट सुरक्षा तथा ती आशिर्वादका साथ ओर्ल[4] जो तिमीमाथि छ तथा तिम्रो साथका धेरै समुदायहरूमाथि ।[5] तथा धेरैजसो ती समुदायहरू हुनेछन् जसलाई

पैगम्वरले पनि वचाउन सामर्थ्य राख्दैन । आजकल मानिसहरू पीर, फकीर तथा गद्दी नशीनहरू (पूजारीहरू) सित सम्वन्ध हुनुलाई नै मोक्षका लागि पर्याप्त मान्दछन् तथा पुण्यको काम गर्नुको आवश्यकता ठान्दैनन् । यद्यपि जब पुण्यको कार्यविना नवीका साथ वंशीय सम्वन्ध पनि काम आउँदैन, त यी सम्बन्ध के काम आउनेछन् ?

[1]यसवाट ज्ञात भयो कि नवीलाई परोक्षको ज्ञान हुँदैन, उसलाई त्यति नै ज्ञान हुन्छ, जति वह्यी (प्रकाशना) द्वारा अल्लाह तआ़ला उसलाई ज्ञान प्रदान गर्दछ । यदि आदरणीय नूहलाई पूर्व ज्ञान भएको भए कि उनको प्रार्थना स्वीकार हुनेछैन त निःसन्देह उनी त्यसवाट वच्थे ।

[2]यो अल्लाह तआ़लाको तर्फबाट आदरणीय नूहलाई शिक्षा हो, जसको उद्देश्य उनलाई त्यस उच्च स्थानमा आसीन गर्नु हो, जुन कर्मी ज्ञानीहरूका लागि अल्लाहको सदनमा छ ।

[3]जव आदरणीय नूहले यो कुरा वुझे कि उनको प्रश्न घटनाका अनुसार थिएन तब तुरुन्त त्यसवाट क्षमा माँगिहाले तथा अल्लाहको कृपा तथा दयाका प्रार्थी भए ।

[4]यो ओर्लनु डुङ्गावाट अथवा पर्वतबाट हो, जसमाथि डुङ्गा गएर रोकिएको थियो ।

[5]यसबाट तात्पर्य त्यो गुट हो, जुन आदरणीय नूहका साथ डुङ्गामा सवार थिए अथवा भविष्यमा हुनसक्ने ती गुट हुन्, जुन उनका वंशमा हुने थिए । आउने वाक्यका अनुसार यही दोस्रो भावार्थ अधिक उचित छ ।

يَمَسُّهُمْ مِّنَّا عَذَابٌ أَلِيمٌ ۝٤٨

हामीले लाभ त अवश्य पुर्‍याउने छौं परन्तु पछि उनीहरूलाई हाम्रो तर्फबाट दुखदायी यातना पुग्ने छ ।[1]

تِلْكَ مِنْ أَنۢبَآءِ ٱلْغَيْبِ نُوحِيهَآ إِلَيْكَ ۖ مَا كُنتَ تَعْلَمُهَآ أَنتَ وَلَا قَوْمُكَ مِن قَبْلِ هَٰذَا ۖ فَٱصْبِرْ ۖ إِنَّ ٱلْعَٰقِبَةَ لِلْمُتَّقِينَ ۝٤٩

(४९) यो समाचार परोक्षका समाचारहरू मध्ये हो जसका वह्यी (प्रकाशना) हामी तपाईंतिर गर्दछौं, यिनलाई यसभन्दा पूर्व न तपाईं जान्नुहुन्थ्यो तथा न तपाईंको समुदाय[2] हुन यसकारण तपाईं धैर्य धारण गर्नुस्, विश्वास गर्नुस् कि परिणाम संयमीहरूको पक्षमा नै छ ।[3]

[1]यी ती गुट हुन् जुन डुङ्गामा बाँच्नेहरूका वंशबाट कयामत (प्रलय) सम्म हुनेछन् । अर्थ यो हो कि ती काफ़िरहरूलाई संसारको क्षणिक जीवन व्यतीत गर्नको लागि हामी संसारको सुख सुविधा अवश्य दिनेछौं तर उनीहरू अन्तमा दुखदायी यातना पनि भोग्ने छन् ।

[2]यो नबी सल्लल्लाहु अलैहि वसल्लमसित सम्बोधन हो तथा उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) बाट परोक्ष ज्ञानलाई नकारिंदैछ कि यी परोक्षका कुराहरू हुन् जसबाट हामी तपाईंलाई सूचित गरिराखेका छौं, अन्यथा तपाईं स.अ.व.स. (सल्लल्लाहु अलैहि वसल्लम) तथा तपाईंको समुदाय तिनीसित अनभिज्ञ थियो ।

[3]अर्थात् तपाईंको समुदाय जो तपाईं (स.अ.व.स.) लाई झुट्लाइराखेको छ तथा तपाईं (स.अ.व.स.) लाई दुख पुगिराखेको छ, त्यसमा धैर्यले काम लिनुस् यसकारण कि हामी तपाईंको सहायता गर्ने छौं, तथा सुपरिणाम तपाईंको (स.अ.व.स.) तथा तपाईं (स.अ.व.स.) का अनुयायीहरूका लागि छ, जो संयमका गुणले युक्त छन् । (आकिबत) संसार तथा परलोकका सुफललाई भन्दछन् । यसमा अल्लाहसित तर्सनेहरूका लागि शुभ-सूचना छ कि प्रारम्भमा उनीहरूलाई चाहे जति पनि कठिनाईहरूको सामना किन न गर्नपरोस्, परन्तु अल्लाह तआलाको सहायता एवं सुफलका तिनै अधिकारी हुन् । जसरी अन्य स्थानमा भन्नुभयो :

﴿إِنَّا لَنَنصُرُ رُسُلَنَا وَٱلَّذِينَ ءَامَنُوا۟ فِى ٱلْحَيَوٰةِ ٱلدُّنْيَا وَيَوْمَ يَقُومُ ٱلْأَشْهَٰدُ﴾

“अवश्य हामी आफ्नो रसूल प्रति विश्वास गर्नेहरू सहयोग यो लोकको जीवनमा पनि गर्ने तथा त्यो दिनमा पनि जब साक्षीहरू उभिनेछन् ।” (सूर: अल-मोमिन-५१)

﴿وَلَقَدْ سَبَقَتْ كَلِمَتُنَا لِعِبَادِنَا ٱلْمُرْسَلِينَ ☆ إِنَّهُمْ لَهُمُ ٱلْمَنصُورُونَ﴾

“हाम्रो वाचा पहिले नै आफ्ना रसूलहरूका लागि भइसकेको छ कि उनीहरू सफल हुनेछन् तथा हाम्रो सेना नै विजेता रहनेछ ।” (सूर: अल-साफ़्फ़ात-१७१ देखि १७३)

وَإِلَىٰ عَادٍ أَخَاهُمْ هُودًا ۚ قَالَ يَٰقَوْمِ ٱعْبُدُوا۟ ٱللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُۥٓ ۖ إِنْ أَنتُمْ إِلَّا مُفْتَرُونَ ﴿٥٠﴾

(५०) तथा आद समुदायतिर उनका भाई हूदलाई हामीले पठयौं,[1] उसले भन्यो, मेरा समुदायका मानिसहरू अल्लाहकै पूजा गर, त्यसको अतिरिक्त कोही पूज्य छैन, तिमी त मात्र आक्षेप लगाइराखेका छौ ।[2]

يَٰقَوْمِ لَآ أَسْـَٔلُكُمْ عَلَيْهِ أَجْرًا ۖ إِنْ أَجْرِىَ إِلَّا عَلَى ٱلَّذِى فَطَرَنِىٓ ۚ أَفَلَا تَعْقِلُونَ ﴿٥١﴾

(५१) हे मेरा समुदायका मानिसहरू ! म तिमीसित यसको कुनै पारिश्रमिक माँग्दिन, मेरो प्रतिफल त्यसको जिम्मामा छ जसले मलाई पैदा गरेको छ, त के तैपनि तिमी बुद्धिले काम लिंदैनौं ।[3]

وَيَٰقَوْمِ ٱسْتَغْفِرُوا۟ رَبَّكُمْ ثُمَّ تُوبُوٓا۟ إِلَيْهِ يُرْسِلِ ٱلسَّمَآءَ عَلَيْكُم مِّدْرَارًا وَيَزِدْكُمْ قُوَّةً إِلَىٰ قُوَّتِكُمْ وَلَا تَتَوَلَّوْا۟ مُجْرِمِينَ ﴿٥٢﴾

(५२) तथा हे मेरा समुदायका मानिसहरू ! तिमी आफ्ना प्रभुसित आफ्ना पापहरूको क्षमा माग तथा त्यसको सदनमा तौबा (प्रायश्चित) गर ताकि त्यसले वर्षा भएका बादल तिमी माथि पठाओस् तथा तिम्रो शक्तिमा अझै वृद्धि गरोस्,[4] तथा तिमी

---

[1]भाईसित तात्पर्य उनैको समुदायको एउटा सदस्य ।

[2]अर्थात् अल्लाहसँग अन्यलाई साझेदार ठहराई तिमी अल्लाहमाथि झूटा कुरा रचिराखेका छौ ।

[3]तथा यो बुझ्दैनौं कि जो विना पारिश्रमिक तथा प्रलोभन तिमीलाई अल्लाहतिर डाकिराखेको छ, त्यो तिम्रो शुभचिन्तक हो । आयतमा (يا قوم) बाट आह्वानको एक विधिको ज्ञान हुन्छ, अर्थात् हे काफिरहरू !, हे मूर्तिपूजकहरू भन्नुको स्थानमा हे मेरा समुदायसित सम्वोधित गरिएको छ ।

[4]आदरणीय हूदले क्षमा-याचनाको शिक्षा आफ्नो वर्ग अर्थात आफ्नो समुदायलाई दिनुभयो तथा त्यसका ती लाभ भन्नुभयो जुन क्षमा-याचना गर्ने जातिलाई प्राप्त हुन्छन् । जसरी कुर्आन करीममा अन्य स्थानहरूमा यी लाभ वर्णित गरिएका छन् (हेर्नुस् सूरः नूह-११) तथा नबी सल्लल्लाहु अलैहि वसल्लमको कथन छ : (مَنْ لَزِمَ الْاِسْتِغْفَارَ جَعَلَ اللهُ لَهُ مِنْ كُلِّ هَمٍّ فَرَجًا، وَمِنْ كُلِّ ضَيْقٍ مَخْرَجًا، وَرَزَقَهُ مِنْ حَيْثُ لَا يَحْتَسِبُ)

पापी भएर मुख नफर्काउ ।[1]

(५३) (उनीहरूले भने) हे हूद ! तिमीले हाम्रो पासमा कुनै लक्षण त ल्याएनौं तथा हामी मात्र तिम्रो भनाईका कारण आफ्ना देवताहरूलाई छाडिदिने छैनौं तथा न हामी तिमीमाथि (ईमान) विश्वास गर्नेछौं ।[2]

قَالُوا يٰهُوْدُ مَا جِئْتَنَا بِبَيِّنَةٍ وَّمَا نَحْنُ بِتَارِكِيْٓ اٰلِهَتِنَا عَنْ قَوْلِكَ وَمَا نَحْنُ لَكَ بِمُؤْمِنِيْنَ ﴿٥٣﴾

(५४) बरू हामी त यही भन्दछौं कि तिमी हाम्रो कुनै देवताको नराम्रो मारमा परिहालेछौ ।[3] उसले उत्तर दियो कि म अल्लाहलाई साक्षी बनाउँछु तथा तिमी पनि साक्षी रह

إِنْ نَّقُوْلُ إِلَّا اعْتَرٰىكَ بَعْضُ اٰلِهَتِنَا بِسُوْٓءٍ ۗ قَالَ إِنِّيْٓ أُشْهِدُ اللّٰهَ وَاشْهَدُوْٓا أَنِّيْ بَرِيْٓءٌ مِّمَّا تُشْرِكُوْنَ ﴿٥٤﴾

"जो निरन्तर क्षमा-याचना गर्दछ, अल्लाह तआला त्यसलाई प्रत्येक चिन्तावाट मुक्ति तथा प्रत्येक अभावबाट निकासको कुनै मार्ग बनाइदिन्छ तथा त्यसको जीविका यस्तो स्थानबाट दिन्छ, जुन उसको विचारमा पनि हुँदैन ।" (अबू-दाऊद किताबुल वित्र बाब फिल इस्तिग्फार संख्या १५१८, तथा इब्ने माजः संख्या ३८१९)

[1]अर्थात् म जुन आमन्त्रण तिमीलाई दिइराखेको छु, त्यसबाट मुख नफर्काउ तथा आफ्नो इन्कारमा अडिग न रह । यस्तो गर्नेछौ भने अल्लाहको सदनमा अपराधी तथा पापी बनेर प्रस्तुत हुनेछौ ।

[2]एउटा नबी युक्ति तथा तर्कहरूको पूरा शक्ति आफ्नो साथमा राख्दछ, तर अन्धाहरूलाई ती देखिँदैनन् । हूदका समुदायले यसै दृढताको प्रदर्शन गर्दै भने कि हामीले कुनै तर्क बिना मात्र तिम्रो भनाईको आधारमा आफ्ना देवताहरूलाई कसरी छाडिदिऊ ?

[3]अर्थात् तिमी जुन हाम्रा देवताहरूको अपमान तथा अनादर गर्दछौ कि उनीहरू केही गर्न सक्दैनन्, यस्तो लाग्दछ कि हाम्रो देवताहरूमध्ये कसैले यसै अनादरको कारण तिमीलाई केही गरिदिएको छ । तथा तिमी सन्की भइहालेका छौ । जस्तो आजकलका नामका मुसलमान पनि यसै प्रकारका शंकाहरूका शिकार छन्, जब उनीहरूलाई भनिन्छ कि यी मृत व्यक्ति तथा महात्मा केही गर्न सक्दैनन् त भन्दछन् कि यो उनको अनादर हो तथा भय छ कि यसप्रकारका अपमान गर्नेहरूलाई ध्वस्त गरिदेऊन् ।

कि म त अल्लाहका अतिरिक्त ती सबैबाट अलग्ग छु, जसलाई तिमी साझीदार बनाइराखेका छौ ।[1]

مِنْ دُوْنِهٖ فَكِيْدُوْنِيْ جَمِيْعًا ثُمَّ لَا تُنْظِرُوْنِ ﴿٥٥﴾

(५५) त्यसोभए तिमी सबै मिलेर मेरो विरूद्धमा नराम्रो कुरा गर तथा मलाई कदापि अवसर पनि नदेउ ।[2]

اِنِّيْ تَوَكَّلْتُ عَلَى اللّٰهِ رَبِّيْ وَرَبِّكُمْ ؕ مَا مِنْ دَآبَّةٍ اِلَّا هُوَ اٰخِذٌۢ بِنَاصِيَتِهَا ؕ اِنَّ رَبِّيْ عَلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٥٦﴾

(५६) मेरो भरोसा मात्र अल्लाह तआलामाथि नै छ, जो मेरो प्रभु तथा तिमी सबैको प्रभु हो, जति पनि हिंड्डुल गर्ने प्राणीहरू छन्, सबैका मस्तक उसैको पकडमा छ ।[3] निश्चय नै मेरो प्रभु सोझो मार्गमा छ ।[4]

فَاِنْ تَوَلَّوْا فَقَدْ اَبْلَغْتُكُمْ مَّآ اُرْسِلْتُ بِهٖٓ اِلَيْكُمْ ؕ وَيَسْتَخْلِفُ

(५७) यदि तैपनि तिमी मुख फर्काउँछौ भने फर्काउ मैले त तिमीलाई त्यो सन्देश पुऱ्याइसकें, जुन दिएर मलाई तिमीतिर पठाइएको थियो ।[5] मेरो प्रभुले तिम्रो

[1]अर्थात् म ती सबै मूर्ति तथा देवताहरूलाई मान्दिन तथा तिम्रो यो विश्वास कि उनीहरूले मलाई केही गरिदिएका छन्, पूर्णरूपमा अनुचित छ । उनीहरूमा यो सामर्थ्य नै छैन कि कसैलाई लाभ अथवा हानि पुऱ्याउन सकून् ।

[2]तथा यदि तिमीलाई मेरा कुरामा विश्वास छैन तथा तिमी आफ्नो यस दावीमा साँचो छौ कि यी मूर्तिहरू केही गर्न सक्छन् भने ल म उपस्थित छु तिमी तथा तिम्रा देवताहरू मिलेर मेरो विरूद्ध केही गरेर देखाऊ । र यसबाट नवीको त्यस शैलीको बोध हुन्छ कि त्यो कति ज्ञानी हुन्छ कि त्यसलाई आफू सत्य हुने कुरोमा विश्वास हुन्छ ।

[3]अर्थात् जुन अस्तित्वको हातमा प्रत्येक वस्तुको अधिकार तथा नियन्त्रण छ, त्यो त्यही अस्तित्व हो, जो मेरो तथा तिम्रो प्रभु हो, मेरो भरोसा त्यसैमाथि छ । उद्देश्य यी शव्दहरूवाट आदरणीय हूद अलैहिस्सलामको यो हो कि जसलाई तिमीले अल्लाहका साझेदार वनाएका छौ र तिनीहरूमाथि अल्लाहकै नियन्त्रण छ, अल्लाह तआला उनीहरूलाई जे चाहन्छ, गर्नसक्छ, उनीहरू कसैको केही गर्न सक्दैनन् ।

[4]अर्थात् त्यो जो एकेश्वरवादको आमन्त्रण दिइराखेको छ, निःसन्देह यो आमन्त्रण नै सोझो मार्ग हो, यसैमा हिंडेर मोक्ष तथा सफलता प्राप्त गर्न सकिन्छ तथा यस सोझो मार्गबाट विमुख तथा विचलित हुनु विनाशको कारण हो ।

[5]अर्थात् त्यस पश्चात मेरो कर्तव्य समाप्त तथा तिमीमाथि तर्कपूर्ण भइसक्यो ।

رَبِّي قَوْمًا غَيْرَكُمْ وَلَا تَضُرُّونَهُ شَيْئًا ۚ إِنَّ رَبِّي عَلَىٰ كُلِّ شَيْءٍ حَفِيظٌ ﴿٥٧﴾

स्थानमा अन्य कौमलाई ल्यादिने छ तथा तिमीले त्यसको केही पनि बिगार्न सक्ने छैनौं ।[1] निःसन्देह मेरो प्रभु प्रत्येक वस्तुको रक्षक छ ।[2]

وَلَمَّا جَاءَ أَمْرُنَا نَجَّيْنَا هُودًا وَالَّذِينَ آمَنُوا مَعَهُ بِرَحْمَةٍ مِّنَّا وَنَجَّيْنَاهُم مِّنْ عَذَابٍ غَلِيظٍ ﴿٥٨﴾

(५८) तथा जब हाम्रो आदेश आइपुग्यो, त हामीले हूदलाई तथा त्यसका मुसलमान साथीलाई आफ्नो विशेष कृपाले मुक्ति प्रदान गर्‍यौं तथा हामीले ती सबैलाई घोर (कडा) यातनाबाट बचायौं ।[3]

وَتِلْكَ عَادٌ ۖ جَحَدُوا بِآيَاتِ رَبِّهِمْ وَعَصَوْا رُسُلَهُ وَاتَّبَعُوا أَمْرَ كُلِّ جَبَّارٍ عَنِيدٍ ﴿٥٩﴾

(५९) यी थिए आदको समुदाय, जसले आफ्ना प्रभुका आयतलाई अस्वीकार गरे तथा त्यसका रसूलहरूको अवज्ञा गरे तथा प्रत्येक दुष्ट

[1]अर्थात् तिमीलाई नाश गरी तिम्रो भूमि तथा सम्पत्तिको अरूहरूलाई स्वामी वनाइदेओस्, त्यो यस्तो गर्नुको सामर्थ्य राख्दछ तथा तिमी त्यसको केही विगार्न सक्दैनौ वरू त्यो आफ्नो इच्छा तथा विवेक अनुसार यस्तो गर्दैरहन्छ ।

[2]निःसन्देह त्यो मलाई तिम्रा धोका तथा षड्यन्त्रबाट सुरक्षित पनि राख्नेछ तथा शैतानी चालहरूवाट बचाउनेछ । यसका अतिरिक्त प्रत्येक राम्रो तथा नराम्रोलाई उनका कर्म अनुसार राम्रो-नराम्रो फल पनि दिनेछ ।

[3]कडा यातनाबाट तात्पर्य त्यही प्रचण्ड वायुको प्रकोप हो, जसद्वारा आदरणीय हूदको समुदाय 'आद' लाई ध्वस्त गरियो तथा जसबाट आदरणीय हूद तथा उनमा निष्ठा राख्नेहरूलाई बचायो ।

[4]'आद' तिर मात्र एउटा नबी आदरणीय हूद नै पठाइएका थिए । तर यहाँ अल्लाह तआलाले आदेश गर्‍यो कि उनीहरूले रसूलको अवज्ञा गरे । यसबाट या त यो तात्पर्य छ कि एउटा रसूललाई झुट्लाउनु यस्तो भयो जस्तो कि सबैलाई झुठ्लाएको छ, किनभने सबै रसूलहरूमा ईमान कायम गर्नु अनिवार्य छ अथवा यो अर्थ हो कि यो समाज आफ्नो कुफ्र तथा इन्कारमा यति बढ्यो कि यदि आदरणीय हूद पश्चात कैयन् रसूल पठाएको भएपनि यो समुदाय सबैलाई झुठ्लाउँथे । तथा त्यसबाट कदापि यो आशा थिएन कि त्यो कुनै पनि रसूलमा ईमान ल्याउँथ्यो । अथवा सम्भव छ कि अरू पनि नबी पठाइएका हुन् तथा त्यस समुदायले प्रत्येकलाई झुठ्लाएको होस् ।

अवज्ञाकारीहरूका आदेशको पालना गऱ्यो ।[1]

(६०) तथा यस संसारमा पनि उनलाई धिक्कारले पछ्यायो तथा केयामत (प्रलय) को दिन पनि ।[2] सुनिहाल आदको समुदायले आफ्नो प्रभुसित कुफ्र (इन्कार) गरे, आद, हूदको क़ौम (समुदाय) बिनष्ट होस् ।[3]

وَأُتْبِعُوا فِي هَٰذِهِ الدُّنْيَا لَعْنَةً وَيَوْمَ الْقِيَامَةِ ۗ أَلَا إِنَّ عَادًا كَفَرُوا رَبَّهُمْ ۗ أَلَا بُعْدًا لِعَادٍ قَوْمِ هُودٍ ﴿٦٠﴾

(६१) तथा समूदको समुदायतिर उनको भाई स्वालेहलाई पठायो ।[4] उसले भन्यो कि हे मेरा समुदायका मानिसहरू ! तिमी अल्लाहको इबादत (बन्दना) गर, त्यसको अतिरिक्त तिम्रो कोही पूज्य छैन ।[5] उसैले तिमीलाई धर्तीबाट पैदा -

وَإِلَىٰ ثَمُودَ أَخَاهُمْ صَالِحًا ۚ قَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ ۖ هُوَ أَنشَأَكُم مِّنَ الْأَرْضِ وَاسْتَعْمَرَكُمْ فِيهَا

[1]अर्थात् अल्लाहका पैग़म्बरहरूलाई त झुठ्लायो तर जुन मानिसहरूले अल्लाहका आदेशहरूको अवहेलना गर्दथे, उनको यस समुदायले अनुसरण गऱ्यो ।

[2]धिक्कारको अर्थ हो अल्लाहको कृपाबाट टाढा हुनु र पुण्यका कार्यहरूबाट बञ्चित तथा मानिसहरूको तर्फबाट धिक्कृत तथा अलग्ग हुनु । संसारमा यो धिक्कार यसप्रकार कि ईमान भएकाहरूमा यिनको वर्णन सधैं धिक्कार तथा विलगावको रूपमा हुनेछ, तथा केयामत (प्रलय) मा यसप्रकार कि त्यहाँ सबैका साम्नू अपमान तथा अनादरको सामना गर्नेछन् तथा अल्लाहको यातनामा फँस्नेछन् ।

[3](بُعْدًا) को यो शब्द धिक्कार तथा विनाशको अर्थको लागि छ, जस्तो कि यसभन्दा पूर्व पनि स्पष्ट गरिसकिएको छ ।

[4](وإلى ثمود) आधारित छ पूर्वमाथि अर्थात् (وأرسلنا إلى ثمود) हामीले समूदतिर पठायौं । यो समुदाय तबूक तथा मदीनाको मध्ये मदाएन स्वालेह (अर्थात् हिजर) मा निवास गर्दथ्यो तथा यो समुदाय आदको पश्चात भयो । आदरणीय स्वालेहलाई यहाँपनि समूदको भाई भनिएको छ, जसबाट तात्पर्य उनैको बंश तथा जातिको एउटा सदस्य हो ।

[5]आदरणीय स्वालेहले पनि आफ्नो समुदायलाई सर्वप्रथम एकेश्वरवादको आमन्त्रण दिए, जस्तो प्रकार सबै नबीहरूको नियम रहेको छ ।

فَاسْتَغْفِرُوْهُ ثُمَّ تُوْبُوْٓا اِلَيْهِ ؕ اِنَّ رَبِّيْ قَرِيْبٌ مُّجِيْبٌ ۝٦١

गरेको छ[1] तथा उसैले तिमीलाई यस धर्तीमा बसोबास गराएको छ[2] अतः तिमी उसित क्षमा माँग तथा उसतिर ध्यान गर । निःसन्देह मेरो प्रभु प्रार्थनाहरूलाई स्वीकार गर्ने निकट छ ।

قَالُوْا يٰصٰلِحُ قَدْ كُنْتَ فِيْنَا مَرْجُوًّا قَبْلَ هٰذَآ اَتَنْهٰىنَآ اَنْ نَّعْبُدَ مَا يَعْبُدُ اٰبَآؤُنَا وَاِنَّنَا لَفِيْ شَكٍّ مِّمَّا تَدْعُوْنَآ اِلَيْهِ مُرِيْبٍ ۝٦٢

(६२) उनीहरूले भने हे स्वालेह ! यसभन्दा पूर्व तिमी हामीबीच यस्तो व्यक्ति थियौ जसबाट हामीलाई धेरै आशाहरू थिए, के तिमीले हामीलाई उनको पूजा-अर्चनाबाट रोक्दछौ, जसको पूजा अर्चना हाम्रा पूर्वज गर्दैआइराखेका थिए ? हामीलाई त यस धर्ममा सन्देह छ, जसतिर तिमी हामीलाई डाकिराखेका छौ, हामी त चकित छौं ।[3]

قَالَ يٰقَوْمِ اَرَءَيْتُمْ اِنْ كُنْتُ عَلٰى بَيِّنَةٍ مِّنْ رَّبِّيْ وَاٰتٰىنِيْ مِنْهُ رَحْمَةً فَمَنْ يَّنْصُرُنِيْ مِنَ اللّٰهِ

(६३) उसले उत्तर दियो कि हे मेरा समुदायका मानिसहरू ! के तिमीले विचार गर्‍यौ ? यदि मसँग आफ्नो प्रभुको तर्फबाट स्पष्ट तर्क छ र उसले मलाई दयालुता प्रदान गरेको छ ।[4]

[1]अर्थात् प्रारम्भमा तिमीलाई धर्तीबाट पैदा गर्‍यो, त्यो यसप्रकार कि तिम्रा परमपिता आदमको उत्पत्ति माटोबाट भयो तथा सबै मनुष्य आदमको वंशमा पैदा भए, यसप्रकार सबै मानिसहरूको उत्पत्ति धर्तीबाट भयो । अथवा यसको अर्थ हो कि तिमी जे-जति खान्छौ पिउँछौ, सबै धर्तीबाट उब्जन्छ तथा त्यसै भोज्य पदार्थबाट वीर्य बन्छ जो माताको गर्भाशयमा गई मनुष्यको अस्तित्वको कारण बन्दछ ।

[2]अर्थात् तिमीमा धर्तीलाई बसाउने तथा आवाद गर्नुको शक्ति तथा गुण उत्पन्न गरे, जसबाट तिमी बास गर्नको निम्ति घरहरूको निर्माण गर्दछौ, भोजनको लागि कृषि गर्दछौ तथा अन्य जीवन सामग्रीलाई उपलब्ध गराउनको लागि उद्योग तथा कलाले काम लिन्छौ ।

[3]अर्थात् पैग़म्बर आफ्नो समुदायमा चरित्र, आचरण, न्याय तथा सत्यतामा श्रेष्ठ हुन्छ, यसकारण समुदायको त्यसबाट शुभ आशाहरू सम्बन्धित हुन्छन् । यसैकारण आदरणीय स्वालेहको समुदायले पनि उनीसित यो भन्यो । तर एकेश्वरवादको आमन्त्रण दिनासाथ उनका आशाहरूको यो केन्द्र उनका आँखाहरूको काँडा बन्नपुग्यो तथा त्यस धर्ममा शंकाको प्रदर्शन गरे जसतिर आदरणीय स्वालेह उनलाई बोलाइराखेका थिए अर्थात् एकेश्वरबादी धर्म ।

[4](بينة) सित तात्पर्य त्यो ईमान तथा विश्वास हो, जुन अल्लाह तआलाले पैग़म्बरहरूलाइ प्रदान गर्दछ तथा कृपाले नबूअत । जस्तो कि अघि व्याख्या गरिसकिएको छ ।

إِنْ عَصَيْتُهُۥ ۖ فَمَا تَزِيدُونَنِى غَيْرَ تَخْسِيرٍ ﴿٦٣﴾

त्यसपछि यदि मैले त्यसको अवज्ञा गरें,[1] त को छ जो त्यसको समक्ष मेरो सहायता गर्दछ ? तिमी त मेरो हानिमा नै बृद्धि गरिराखेका छौ ।[2]

وَيَٰقَوْمِ هَٰذِهِۦ نَاقَةُ ٱللَّهِ لَكُمْ ءَايَةً فَذَرُوهَا تَأْكُلْ فِىٓ أَرْضِ ٱللَّهِ وَلَا تَمَسُّوهَا بِسُوٓءٍ فَيَأْخُذَكُمْ عَذَابٌ قَرِيبٌ ﴿٦٤﴾

(६४) तथा हे मेरा समुदायका मानिसहरू ! यो अल्लाहबाट पठाइएको ऊटनी हो, जो तिम्रो लागि एउटा चमत्कार हो, अब तिमीले त्यसलाई अल्लाहको धर्तीमा खाइराखेको अवस्थामा छाडिदेऊ तथा त्यसलाई कुनै प्रकारको कष्ट न पुऱ्याउ, अन्यथा शीघ्र नै तिमीलाई यातनाले समातिहाल्नेछ ।[3]

فَعَقَرُوهَا فَقَالَ تَمَتَّعُوا۟ فِى دَارِكُمْ ثَلَٰثَةَ أَيَّامٍ ۖ ذَٰلِكَ وَعْدٌ غَيْرُ مَكْذُوبٍ ﴿٦٥﴾

(६५) तैपनि उनीहरूले त्यस ऊटनीका खुट्टा काटेर मारिहाले । यसपछि स्वालेहले भनें कि लौ अब तिमी आफ्नो घरहरूमा तीन दिनसम्म आनन्दसँग बिताऊ, यो वायदा (वाचा) भूटा छैन ।[4]

[1]अवज्ञासित तात्पर्य यो हो कि यदि म तिमीलाई सत्यतिर तथा एउटा अल्लाहको पूजातिर आह्वान गर्न छाडिदेऊँ जस्तो कि तिमी चाहन्छौ ।

[2]अर्थात् यदि म यस्तो गर्छु भने तिमी मलाई कुनै लाभ पुऱ्याउन सक्दैनौ तर यसप्रकार तिमीले मेरो हानिमा वृद्धि गर्नेछौ ।

[3]यो त्यही उँटनी हो, जुन अल्लाह तआलाले उनको मागमा उनका आँखाको अगाडी एक पर्वत अथवा चट्टानबाट निकाल्यो । यसैकारण त्यसलाई (अल्लाहको उँटनी) भनिएको छ, किनभने त्यो मात्र अल्लाहको आदेशबाट चमत्कारिक रूपले अस्वभाविक बिधिबाट प्रकट भएको थियो । त्यसको लागि उनीहरूलाई निर्देशित गरिएको थियो कि यसलाई कष्ट नपुऱ्याउ, अन्यथा तिमी अल्लाहको प्रकोपको पकडमा पर्नेछौ ।

[4]तर ती अत्याचारी यो विशिष्ट चमत्कार प्रदर्शित भए उपरान्त पनि न केवल ईमान नै ल्याएनन्, वरू अल्लाहको निर्देशहरूको पनि अवहेलना गरेर त्यसलाई मारिहाले, जसपश्चात उनीहरूलाई तीन दिनको समय दिइयो कि तीन दिन उपरान्त तिमीलाई अल्लाहको प्रकोपद्वारा नष्ट गरिनेछ ।

(६६) अनि जब हाम्रो आदेश आईपुग्यो,[1] हामीले स्वालेह तथा उनीसँगै ईमान स्थापित गर्नेहरूलाई आफ्नो कृपाले त्यसबाट बचायौं तथा त्यस दिनको अपमानबाट पनि। निःसन्देह तिम्रो प्रभु शक्तिशाली तथा प्रभावशाली छ।

فَلَمَّا جَآءَ أَمْرُنَا نَجَّيْنَا صٰلِحًا وَّالَّذِيْنَ اٰمَنُوْا مَعَهٗ بِرَحْمَةٍ مِّنَّا وَمِنْ خِزْيِ يَوْمِئِذٍ ۗ اِنَّ رَبَّكَ هُوَ الْقَوِيُّ الْعَزِيْزُ ﴿٦٦﴾

(६७) तथा अत्याचारीहरूलाई ठूलो तीव्र चित्कारले आई समात्यो,[2] अनि त उनी आफ्नै घरहरूमा घोप्टो परेको अवस्थामा परिरहे।[3]

وَاَخَذَ الَّذِيْنَ ظَلَمُوا الصَّيْحَةُ فَاَصْبَحُوْا فِيْ دِيَارِهِمْ جٰثِمِيْنَ ﴿٦٧﴾

(६८) मानौं तिनीहरू त्यहाँ कहिल्यै आबाद भएकै थिएनन्।[4] सावधान! समूदका समुदायले आफ्नो प्रभुसित कुफ्र गरे, सुनिहाल, धिक्कार होस् समूदको समुदायमाथि।

كَاَنْ لَّمْ يَغْنَوْا فِيْهَا ۗ اَلَآ اِنَّ ثَمُوْدَا۟ كَفَرُوْا رَبَّهُمْ ۗ اَلَا بُعْدًا لِّثَمُوْدَ ﴿٦٨﴾

(६९) तथा हामीले पठाएका सन्देशवाहकहरू इब्राहीमको पासमा शुभ-सूचना लिएर पुगे।[5] तथा सलाम

وَلَقَدْ جَآءَتْ رُسُلُنَآ اِبْرٰهِيْمَ

[1]यसबाट तात्पर्य त्यही प्रकोप हो जो वचन अनुसार चौथो दिन आयो तथा आदरणीय स्वालेह तथा उनीमाथि ईमान क़ायम गर्नेहरूका अतिरिक्त सबैलाई मारियो।

[2]यो प्रकोप चीत्कार तथा तीव्र गर्जनको रूपमा आयो, केही ज्ञाताहरूका निकट यो आदरणीय जिब्रीलको चर्को स्वर थियो तथा केहीका निकट आकाशबाट आएको थियो जसबाट उनका हृदय क्षत-विक्षत भए तथा उनी मरिहाले, त्यस पश्चात तथा त्यसको साथै भूकम्प पनि आयो जसले सबैथोक तलमाथि पारिदियो। जस्तो कि सूर: आराफ-७८ का शब्द छन्।

[3]जसरी पंक्षी मरे पश्चात धर्तीमा माटोमा परिरहन्छ, त्यसैप्रकार यिनी मरेर घोप्टो परी धर्तीमा परेका थिए।

[4]उनको वस्ती अथवा यिनीहरू अथवा यी दुबै यसप्रकार मेटाइए कि उनको कुनै चिन्ह शेष रहेन, जस्तो कि उनी कहिल्यै यहाँ बसेकै थिएनन्।

[5]यो वास्तवमा आदरणीय लूत तथा उनको समुदायको घटनाको एउटा भाग हो। आदरणीय लूत आदरणीय इब्राहीमको काकाको पुत्र थिए। आदरणीय लूतको बस्ती 'मृत्यु सागर' को दक्षिण पूर्वमा थियो जबकि आदरणीय इब्राहीम अलैहिस्सलाम फिलिस्तीनमा निवास गरिराखेका थिए। जब आदरणीय लूतका समुदायलाई समाप्त गर्नुको निर्णय लिइयो त्यतिखेर उनीतिर फरिश्ताहरू पठाइए।

بِالْبُشْرٰى قَالُوْا سَلٰمًا ۭ قَالَ سَلٰمٌ فَمَا لَبِثَ اَنْ جَاۗءَ بِعِجْلٍ حَنِيْذٍ ۝

भने[1]। उनले पनि सलामको उत्तर दिए[2] तथा कुनै विलम्ब नगरी एउटा पोलेको बाछो ल्याए ।[3]

فَلَمَّا رَآٰ اَيْدِيَهُمْ لَا تَصِلُ اِلَيْهِ نَكِرَهُمْ وَاَوْجَسَ مِنْهُمْ خِيْفَةً ۭ قَالُوْا لَا تَخَفْ اِنَّآ اُرْسِلْنَآ اِلٰى قَوْمِ لُوْطٍ ۝

(७०) किन्तु जब इब्राहीमले देखे कि उनका त हात पनि त्यसतिर पुगिराखेका छैनन् त उनीहरूलाई अन्जान पाएर मनै-मनमा उनीहरूसित भयभीत हुनथाले।[4] उनीहरूले भने, नतर्स, हामी त लूतको समुदायतिर पठाइएर आएका हौं ।[5]

यी फरिश्ताहरू लूतको समुदायतिर जाँदाखेरि मार्गमा आदरणीय इब्राहीम अलैहिस्सलामको पासमा रोकिए तथा उनलाई पुत्रको शुभ-सूचना दिए ।

[1]अर्थात् (سلمنا عليك سلاما) "हामी तपाईंलाई सलाम गर्दछौं ।".

[2]जुनप्रकार प्रथम सलाम लुप्त क्रियाका साथ जबरको स्थितिमा थियो त्यसैप्रकार (سلام) यो उद्देश्य अथवा विधेयको कारण पेशको स्थितिमा छ । वाक्य हुनेछ । (أمركم سلام–عليكم سلام)

[3]आदरणीय इब्राहीम अतिथिहरूको अत्याधिक सत्कार गर्नुहुन्थ्यो । उनले यो बुझ्न सकेनन् कि यी फरिश्ताहरू हुन्, जो मानवका रूपमा आएका हुन् तथा खान-पिन गर्दैनन् बरू उनले उनीहरूलाई अतिथि ठाने तथा तुरून्तै अतिथिहरूको सेवा-सत्कारको लागि बाछोको भुटिएको मासु उनको सेवामा प्रस्तुत गर्नुभयो । यसबाट यो पनि थाहा हुन्छ कि अतिथिसित सोध्नुको आवश्यकता छैन बरू जे उपलब्ध हुन्छ सेवामा प्रस्तुत गरियोस् ।

[4]आदरणीय इब्राहीमले जब देखे कि उनीहरूका हात खाने वस्तुहरूतिर बढिराखेका छैनन् त उनलाई भय प्रतीत भयो । भन्दछन् कि उनीकहाँ यो कुरो प्रसिद्ध थियो कि आएको अतिथिले यदि भोजनको लाभ उठाएन भने यो ठानिन्थ्यो कि आउने अतिथि राम्रो विचारले आएको होइन । यसबाट यो पनि ज्ञात भयो कि अल्लाहका पैगम्बरहरूलाई परोक्षको ज्ञान हुँदैन । यदि इब्राहीम अलैहिस्सलाम परोक्षका कुरा जान्ने भएको भए बाछोको भुटिएको मासु पनि ल्याउन्नथे तथा उनीसित भयभीत पनि हुन्नथे ।

[5]यस भयको फरिश्ताहरूले आभास गरे, या त ती लक्षणहरूबाट जो यस्ता अवसरहरूमा मनुष्यका अनुहारमा प्रदर्शित हुन्छन् अथवा आफ्नो वार्तालापमा आदरणीय इब्राहीमले यसको चर्चा गर्नुभयो, जस्तो कि अन्य स्थानमा स्पष्टीकरण छ ﴿إِنَّا مِنكُمْ وَجِلُونَ﴾ "हामीलाई त तिमीसित भय लाग्दछ ।" (सूर: अल-हिज्र-५२) अतः फरिश्ताहरूले भने भयभीत नहुनुस्, तपाईं जे सम्झिराख्नु भएको छ हामी त्यो

(७१) तथा त्यसकी पत्नी जो त्यहाँ उभिराखेकी थिई, त्यो हाँस्नथाली,[1] त हामीले उसलाई इसहाकको तथा त्यसको पश्चात याकूबको शुभ-सूचना दियौं ।

وَامْرَاَتُهٗ قَآئِمَةٌ فَضَحِكَتْ فَبَشَّرْنٰهَا بِاِسْحٰقَ وَمِنْ وَّرَآءِ اِسْحٰقَ يَعْقُوْبَ ﴿٧١﴾

(७२) त्यसले भनी वाह ! मेरो भाग्य ! के मलाई सन्तान हुनसक्छ जबकि म स्वयं बृद्धा तथा मेरा पति पनि बृद्ध छन् ? यो निःसन्देह अत्याधिक आश्चर्यको कुरा हो ।[2]

قَالَتْ يٰوَيْلَتٰۤى ءَاَلِدُ وَاَنَا عَجُوْزٌ وَّهٰذَا بَعْلِىْ شَيْخًا ؕ اِنَّ هٰذَا لَشَىْءٌ عَجِيْبٌ ﴿٧٢﴾

(७३) (फरिश्ताहरूले) भने कि के तिमी अल्लाहको सामर्थ्यबारे आश्चर्य गरिराखेकी छौ,[3] यस घरका मानिसहरू ! अल्लाहको कृपा तथा त्यसका विभूतिहरू अवतरित होऊन्,[4] निःसन्देह अल्लाहकै लागि सम्पूर्ण प्रशंसा तथा महिमा हुन्।

قَالُوْۤا اَتَعْجَبِيْنَ مِنْ اَمْرِ اللّٰهِ رَحْمَتُ اللّٰهِ وَبَرَكٰتُهٗ عَلَيْكُمْ اَهْلَ الْبَيْتِ ؕ اِنَّهٗ حَمِيْدٌ مَّجِيْدٌ ﴿٧٣﴾

---

होइनौ बरू हामी अल्लाहको फरिश्ता हौं तथा हामी लूतको समुदायतिर गईराखेका छौं ।

[1]आदरणीय इब्राहीमकी पत्नी किन हाँसिन् ? केही ज्ञानीहरू भन्दछन् कि लूतको समुदायको उपद्रवसित उनी पनि अवगत थिइन्, उनको विनाशको सूचना पाएर उनी पनि प्रसन्न भईन् । केही भन्छन् कि यसकारण हाँसो लाग्यो कि हेर, आकाशबाट उनको विनाशको निर्णय भइसकेछ तथा यो समुदाय अहिले पनि निश्चिन्त छ । तथा केही भन्दछन् कि यस हाँस्नुको सम्बन्ध त्यस शुभ-सूचनासित छ, जुन फरिश्ताहरूले यस बृद्ध जोडीलाई दिए ।

[2]यो पत्नी आदरणीय सारा थिइन्, जो स्वयं पनि बृद्धा थिइन् तथा उनका पति आदरणीय इब्राहीम पनि वृद्ध थिए । यसकारण आश्चर्य एउटा स्वभाविक कुरो थियो जसलाई तिनले व्यक्त गरिन् ।

[3]यो प्रश्न नकारात्मक हो । अर्थात् तिमी अल्लाह तआलाको न्याय तथा निर्णयमा कुन प्रकार आश्चर्यको प्रदर्शन गर्दछौ, जब उसको लागि कुनै काम कठिन छैन । तथा उसलाई सामयिक साधनहरूको आवश्यकता छैन । त्यो त जे चाहन्छ, त्यसको लागि केवल शब्द (कुन) (भईहाल) बाट प्रदर्शन अस्तित्वमा आउँछ ।

[4]आदरणीय इब्राहीमकी पत्नीलाई यहाँ फरिश्ताहरूले (أهل بيت) (अहले बैत) (घर वालाहरू) भनेका छन् तथा उनीहरूलाई पुलिङ्ग बहुवचन (عليكم) बाट सम्बोधित गरेका छन् जसबाट एउटा यो कुरो त सिद्ध भयो कि 'अहले बैत' मा कुनै व्यक्ति की पत्नी सर्वप्रथम सम्मिलित हुन्छे ।

(७४) जब इब्राहीमको भय समाप्त भयो तथा उनलाई शुभ-सूचना पनि पुगिसक्यो त हामीसित लूतको समुदायको विषयमा भनसुन गर्नथाले ।[1]

فَلَمَّا ذَهَبَ عَنْ إِبْرٰهِيمَ الرَّوْعُ وَجَآءَتْهُ الْبُشْرٰى يُجَادِلُنَا فِى قَوْمِ لُوطٍ ﴿٧٤﴾

(७५) नि:सन्देह इब्राहीम अत्याधिक धैर्यवान तथा कोमल हृदय तथा अल्लाहतिर नतमस्तक हुने व्यक्ति थिए ।

إِنَّ إِبْرٰهِيمَ لَحَلِيمٌ أَوّٰهٌ مُّنِيبٌ ﴿٧٥﴾

(७६) हे इब्राहीम ! यस विचारलाई त्यागिदेउ, तपाईंको प्रभुको आदेश आइपुगेको छ, तथा उनीमाथि नफर्काइने यातना अवश्य आउनेछ ।[2]

يٰٓإِبْرٰهِيمُ أَعْرِضْ عَنْ هٰذَآ إِنَّهُ قَدْ جَآءَ أَمْرُ رَبِّكَ وَإِنَّهُمْ ءَاتِيهِمْ عَذَابٌ غَيْرُ مَرْدُودٍ ﴿٧٦﴾

(७७) तथा जब हाम्रा पठाइएका फरिश्ताहरू (स्वर्गदूत) लूतको पासमा पुगे त उनी तिनका कारण अत्याधिक दुखी भए र दुखी मनले भन्नलागे कि आजको दिन अत्याधिक दुखको दिन हो ।[3]

وَلَمَّا جَآءَتْ رُسُلُنَا لُوطًا سِىٓءَ بِهِمْ وَضَاقَ بِهِمْ ذَرْعًا وَقَالَ هٰذَا يَوْمٌ عَصِيبٌ ﴿٧٧﴾

---

अर्को कुरो यो कि भ्फूटले वैतका लागि पुलिङ्ग वहुवचनको प्रयोग गर्नु पनि उचित छ, जस्तो कि सूर: अहजाव आयत संख्या-३३ मा अल्लाह तआलाले रसूलुल्लाह सल्लल्लाहु अअलैहि वसल्लमका पवित्र पत्नीहरूलाई पनि अहले बैत भनेको छ तथा उनीहरूलाई पुरुषवाचक वहुवचन सर्वनामबाट सम्बोधित पनि गरेको छ ।

[1]यस वार्तालापबाट तात्पर्य यो हो कि आदरणीय इब्राहीमले फरिश्ताहरूसित भने कि जुन वस्तीलाई तिमी ध्वस्त पार्न गईराखेका छौ, त्यसैमा आदरणीय लूत पनि उपस्थित छन् । जसपश्चात फरिश्ताहरूले उत्तर दिए, "हामी जान्दछौं कि लूत पनि त्यहीं वस्छन् । परन्तु हामीले उनलाई तथा उनको परिवारबाहेक उनकी पत्नीलाई पनि वचाउने छौं ।" (सूर: अल-अनकबूत-३२)

[2]यो फरिश्ताहरूले आदरणीय इब्राहीमसित भने कि अब यस वार्तालापबाट कुनै लाभ छैन त्यसलाई छाड्नुस् । अल्लाहको त्यो आदेश (विनाशको) आइसकेको छ, जुन अल्लाहकहाँ भाग्यमा थियो तथा अब यो प्रकोप न कसैको वार्तालापबाट रोकिनेछ, न कुनै प्रार्थनाबाट समाप्त हुनेछ ।

[3]आदरणीय लूतको यस अत्याधिक व्याकूलताको कारण ब्याख्याकारहरूले यहाँ लेखेका छन् कि फरिश्ताहरू दाह्री-जुङ्गा नभएका नवयुवकको रूपमा आएका थिए जसबाट आदरणीय लूतले आफ्नो समुदायको दुराचारको कारण भयको आभास

(७८) तथा उसका मानिसहरू उसतिर दगुर्दै आए, उनीहरू त अघिदेखि नै कुकर्महरूमा लीन थिए ।[1] लूतले भने कि हे मेरा समुदायका मानिसहरू ! यी हुन् मेरा पुत्रीहरू जो तिम्रा लागि अत्याधिक पवित्र छन् ।[2] अल्लाहसित तर्स तथा मलाई मेरा अतिथिहरूको विषयमा अपमानित नगर । के तिमीहरूमध्ये एउटा पनि राम्रो विचार भएको छैन ।[3]

وَجَآءَهٗ قَوْمُهٗ يُهْرَعُوْنَ اِلَيْهِ ؕ وَمِنْ قَبْلُ كَانُوْا يَعْمَلُوْنَ السَّيِّاٰتِ ؕ قَالَ يٰقَوْمِ هٰٓؤُلَآءِ بَنَاتِيْ هُنَّ اَطْهَرُ لَكُمْ فَاتَّقُوا اللّٰهَ وَلَا تُخْزُوْنِ فِيْ ضَيْفِيْ ؕ اَلَيْسَ مِنْكُمْ رَجُلٌ رَّشِيْدٌ ﴿٧٨﴾

(७९) उनीहरूले उत्तर दिए कि तिमी त राम्ररी जान्दछौ कि हामीलाई त तिम्रा पुत्रीहरूमाथि कुनै

قَالُوْا لَقَدْ عَلِمْتَ مَا لَنَا فِيْ بَنٰتِكَ مِنْ حَقٍّ ۚ وَاِنَّكَ

गरे, किनभने उनलाई यो ज्ञात थिएन कि आउनेहरू यी नवयुवक अतिथि होइनन्, बरू अल्लाहको तर्फबाट पठाइएका फरिश्ताहरू हुन्, जो यस समुदायलाई विनाश गर्नको लागि आएका हुन् ।

[1]जब बाल मैथुनका यी रोगीहरूलाई थाहा भयो कि केही राम्रा युवक लूतका घरमा आएका छन् त दगुर्दै आए तथा उनीहरूलाई आफूसँग लैजानको लागि बाध्य गर्नथाले ताकि उनीहरूले आफ्ना कामवासनाको पूर्ति गरून् ।

[2]अर्थात् यदि तिमीहरूलाई कामवासनाको संतृप्ति गर्नुछ भने त्यसका लागि मेरा आफ्ना पुत्रीहरू छन्, जोसित तिमी विवाह गरेर आफ्नो उद्देश्य पूरा गर, यी तिम्रा लागि हरेक प्रकारले श्रेष्ठ छन् । केही विद्वानहरूले भने कि पुत्रीहरूसित तात्पर्य समाजका सामान्य स्त्रीहरू हुन्, तथा उनीहरूलाई आफ्नो पुत्रीहरू यसकारण भनियो कि पैग़म्बर आफ्नो समुदायको पिता समान हुन्छ । अर्थ यो हो कि यस कामवासनाका लागि स्त्रीहरू छन्, उनीसित विवाह गर तथा आफ्नो उद्देश्य पूरा गर । (इब्ने कसीर)

[3]अर्थात् म कहाँ आएका अतिथिहरूका साथ दुर्व्यवहार एवं बल प्रयोग गरेर मलाई अपमानित नगर । के तिमीमध्ये एउटा पनि व्यक्ति विवेकशील छैन जसले अतिथि सत्कारका नियमहरू बुझोस् ? तथा तिम्रा नराम्रा उद्देश्यबाट तिमीलाई रोक्न सकोस् । आदरणीय लूतले यी सारा कुरा यस आधारमा गरे कि उनलाई यो ज्ञात थिएन कि यी वास्तवमा फरिश्ताहरू हुन्, उनी तिनीहरूलाई नवआगन्तुक तथा यात्री नै ठाने । यसकारण उचित रूपले उनीहरूको सुरक्षालाई आफ्नो आदर तथा सम्मानको लागि आवश्यक ठाने । यदि उनलाई ज्ञात भएको भए अथवा परोक्षको ज्ञान भए त स्पष्ट कुरो छ कि उनलाई यो व्याकुलता कहिल्यै प्रतीत हुँदैनथ्यो, जुन उनलाई भयो तथा जसको दृश्य यहाँ कुर्आन मजीदमा कोरिएको छ ।

لِتَعْلَمُ مَا نُرِيدُ ﴿٧٩﴾

अधिकार नै छैन तथा तिमी हाम्रो मूल इच्छासित राम्ररी परिचित छौ ।[1]

قَالَ لَوْ أَنَّ لِي بِكُمْ قُوَّةً أَوْ آوِي إِلَىٰ رُكْنٍ شَدِيدٍ ﴿٨٠﴾

(८०) लूतले भने कि काश ! ममा तिमीसित लड्नुको शक्ति भएको भए अथवा म कुनै सुदृढ शरणमा भएको भए ।[2]

قَالُوا يَا لُوطُ إِنَّا رُسُلُ رَبِّكَ لَنْ يَصِلُوا إِلَيْكَ فَأَسْرِ بِأَهْلِكَ بِقِطْعٍ مِنَ اللَّيْلِ وَلَا يَلْتَفِتْ مِنْكُمْ

(८१) अब फरिश्ताहरूले भने हे लूत ! हामी प्रभुबाट पठाइएका हौं, यिनीहरू तिमीसम्म कदापि पुग्न सक्दैनन् । अत: तिमी आफ्नो घरका मानिसहरूलाई लिएर केही रात बाँकि रहँदा निस्किहाल । तिमीमध्ये

[1]अर्थात् एउटा उचित तथा स्वभाविक नियमलाई उनीहरूले बिल्कुलै रद्द गरिदिए तथा अस्वभाविकता एवं असभ्यतामाथि जोड दिए, जसबाट अनुमान लगाउन सकिन्छ कि त्यो समुदाय आफ्नो असभ्यताका कुकर्ममा कति अगाडी बढिसकेको थियो तथा कस्तो किसिमले अन्धो भईसकेको थियो ।

[2]शक्तिबाट आफ्नो वाहुवल तथा आफ्नो संसाधनको शक्ति तथा सन्तानको शक्ति तात्पर्य छ तथा सुदृढ शरणबाट परिवार, क़बीला अथवा यसैप्रकारको कुनै सुदृढ सहारा तात्पर्य छ । अर्थात अति विवशताको अवस्थामा कामना गरिराखेका छन् कि काश मेरो पासमा आफ्नो कुनै शक्ति भएको भए अथवा कुनै परिवार अथवा क़बीलाको शरण अथवा सहायता मलाई प्राप्त भएको भए आज अतिथिहरूका कारण यो अपमान तथा अनादर हुने थिएन । म यी कुकर्मीहरूको सामना गर्दथ्यौं तथा अतिथिहरूको सुरक्षा पनि गर्दथ्यौं । आदरणीय लूतको यो कामना अल्लाह तआलामाथि भरोसाको विरूद्ध छैन । वरू प्रत्यक्ष साधनको अनुकूल छ । तथा अल्लाह तआलामा भरोसाको उचित अर्थ पनि यही हो कि पहिला सबै प्रष्ट कारण तथा साधनहरूलाई प्रयोगमा ल्याइयोस् तथा त्यस पश्चात अल्लाहमा भरोसा गरियोस् । यो भरोसाको गलत अर्थ हो कि हामी हातखुट्टा भाँचेर बसिहालौं तथा भनौं कि हाम्रो भरोसा अल्लाहमाथि छ । यसकारण आदरणीय लूतले जे-जति भने, प्रत्यक्ष साधनहरूका आधारमा पूर्णरूपले उचित भने जसबाट यो ज्ञान हुन्छ कि अल्लाहको पैग़म्बर जसरी परोक्षको जान्ने हुँदैन त्यसैप्रकार त्यो पूर्णअधिकार भएका पनि हुँदैन । (जस्तो कि आजकल मानिसहरूले यो विश्वास रचिहालेका छन्) यदि नबी संसारमा अधिकारपूर्ण भएको भए नि:सन्देह आदरणीय लूत आफ्नो निसहाय स्थितिको तथा यस कामनाको प्रदर्शन गर्दैनथे जुन उनले वर्णित शब्दहरूमा गरे ।

أَحَدٌ إِلَّا امْرَأَتَكَ إِنَّهُ مُصِيبُهَا مَا أَصَابَهُمْ إِنَّ مَوْعِدَهُمُ الصُّبْحُ أَلَيْسَ الصُّبْحُ بِقَرِيبٍ ﴿٨١﴾

कसैले पनि फर्केर हेर्नुहुन्न, तिम्रो पत्नीबाहेक, यसकारण कि उसलाई पनि त्यहीं पुग्छ, जुन सबैलाई पुग्नेछ। निःसन्देह उनको वाचाको समय प्रातः छ, के प्रातः अति निकट छैन ?[1]

فَلَمَّا جَاءَ أَمْرُنَا جَعَلْنَا عَالِيَهَا سَافِلَهَا وَأَمْطَرْنَا عَلَيْهَا حِجَارَةً مِّن سِجِّيلٍ مَّنضُودٍ ﴿٨٢﴾

(८२) अनि जब हाम्रो आदेश आइपुग्यो, हामीले त्यस वस्तीलाई उलट-पुलट गरिदियौं। माथिको भाग तल गरिदियौं तथा उनीमाथि स-साना ढुङ्गाको वर्षा गऱ्यौं, जुन पत्थर पत्रमाथि पत्र थिए।

مُّسَوَّمَةً عِندَ رَبِّكَ وَمَا هِيَ مِنَ الظَّالِمِينَ بِبَعِيدٍ ﴿٨٣﴾

(८३) तिम्रो प्रभुको तर्फबाट चिन्हित थिए तथा उनीहरू ती अत्याचारीहरूबाट कति पनि टाढा थिएनन्।[2]

وَإِلَىٰ مَدْيَنَ أَخَاهُمْ شُعَيْبًا قَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ وَلَا تَنقُصُوا الْمِكْيَالَ وَالْمِيزَانَ إِنِّي أَرَاكُم بِخَيْرٍ

(८४) तथा हामीले मदयनवासीतिर[3] उनका भाई शुऐबलाई पठायौं, उसले भन्यो हे मेरा समुदायका मानिसहरू ! अल्लाहको उपासना गर, उसको अतिरिक्त तिम्रो कोही पूज्य छैन, तथा नाप-तौलमा पनि कमी नगर।[4] म तिमीलाई

[1]जब फरिश्ताहरूले आदरणीय लूतको विवशता तथा उनका समुदायको दुष्टतालाई देखे त भने, हे लूत ! आत्तिनुपर्ने आवश्यकता छैन। हामीसम्म त के अब यिनीहरू तिमीसम्म पनि पुग्न सक्दैनन्। अब रात्रीको एक भागमा आफ्नो पत्नीबाहेक आफ्ना घरका मानिसहरूलाई लिएर यहाँबाट निस्किहाल। प्रातः हुनसाथ यस वस्तीलाई ध्वस्त गरिदिइनेछ।

[2]यस आयतमा (هِيَ) को सम्बन्ध केही व्याख्याकारहरूका निकट चिन्हित स-साना ढुङ्गाबाट पत्थरसित छ, जुन उनीमाथि वर्षाइए तथा केहीका निकट यसको सम्बन्ध ती वस्तीहरूसित छ, जुन ध्वस्त गरिए तथा जुन सीरिया तथा मदीनाका मध्य थिए तथा अत्याचारीहरूसित तात्पर्य मक्काका मूर्तिपूजक तथा अन्य झूटा हुन्। उद्देश्य उनलाई तर्साउनु हो कि तिम्रो परिणाम पनि त्यस्तै हुनसक्छ, जसको विगत समुदायहरूले सामना गर्नुपऱ्यो।

[3]मदयनको सोधका लागि हेर्नुस् सुरः अल-आराफ आयत संख्या ८५ को व्याख्या।

[4]एकेश्वरवादको आमन्त्रण दिए पश्चात त्यस समुदायमा जुन खुल्लारूपमा चारित्रिक दोष नाप-तौलमा कमीको थियो, त्यसबाट उनीहरूलाई रोके। उनीहरूको यो व्यवहार थियो कि यदि कोही उनको पासमा कुनै वस्तु विक्री गर्नको लागि

وَإِنِّيٓ أَخَافُ عَلَيۡكُمۡ عَذَابَ يَوۡمٖ مُّحِيطٖ ۝٨٤

सम्पन्न देखिराखेको छु[1] तथा मलाई तिम्रो बिषयमा एउटा घेरिने दिनको प्रकोपको भय पनि छ ।[2]

وَيَٰقَوۡمِ أَوۡفُواْ ٱلۡمِكۡيَالَ وَٱلۡمِيزَانَ بِٱلۡقِسۡطِۖ وَلَا تَبۡخَسُواْ ٱلنَّاسَ أَشۡيَآءَهُمۡ وَلَا تَعۡثَوۡاْ فِي ٱلۡأَرۡضِ مُفۡسِدِينَ ۝٨٥

(८५) हे मेरा समुदायका मानिसहरू ! नाप-तौल न्यायपूर्वक पूरा गर, मानिसहरूलाई उनका वस्तुहरू कम नदेऊ,[3] तथा धर्तीमा उपद्रव तथा आतङ्क न मच्चाउ ।[4]

بَقِيَّتُ ٱللَّهِ خَيۡرٞ لَّكُمۡ إِن كُنتُم مُّؤۡمِنِينَۚ وَمَآ أَنَا۠

(८६) अल्लाह तआलाबाट वैध गरिएको शेष लाभ तिम्रो लागि धेरै उत्तम छ यदि

आउँथ्यो भने, त्यसबाट अधिक वस्तु लिने गर्थे तथा यदि कोही ग्राहक किन्न आउँथ्यो भने त्यससित नाप-तौलमा कमी गर्दथे ।

[1]यो त्यस मनाही गर्नुको कारण हो कि जब तिमीमाथि अल्लाहको कृपा यथावत छ तथा उसले सम्पन्नता तथा धन-धान्यले परिपूर्ण गरेको छ, त त्यस पश्चात भने तिमीमा यो दूराचार किन ?

[2]यो दोस्रो कारण हो यदि तिमी आफ्नो त्यस व्यवहारबाट रोकिएनौं भने सम्भव छ कि कयामतका दिनको यातनाबाट तिमी बच्न नसक । घेर्नेदिनसित तात्पर्य प्रलयको दिन हो कि त्यस दिन कोही पापी अल्लाहको पकडबाट बच्न सक्ने छैन, न भागेर कहीं लुक्न सक्नेछ ।

[3]अब वलपूर्वक न्यायकासाथ तिनलाई पूरा-पूरा तौलनु र नाप्नुको आदेश दिइंदैछ तथा मानिसहरूलाई वस्तुहरू कम गर्नबाट रोकिंदैछ, किनभने अल्लाहका समक्ष यो पनि महाअपराध हो तथा अल्लाह तआलाले एउटा पूरै सूर:मा यस अपराधका लक्षण, दोष तथा त्यसका पारलौकिक दण्डहरूको वर्णन गरेको छ ।

﴿ وَيۡلٞ لِّلۡمُطَفِّفِينَ ☆ ٱلَّذِينَ إِذَا ٱكۡتَالُواْ عَلَى ٱلنَّاسِ يَسۡتَوۡفُونَ ☆ وَإِذَا كَالُوهُمۡ أَو وَّزَنُوهُمۡ يُخۡسِرُونَ ﴾

"मुतफ़्फ़ेफीन अर्थात् नाप-तौलमा घटाइ-बढाइ गर्नेहरूको लागि विनाश छ । यी ती मानिसहरू हुन् जो मानिसहरूसित जब कुनै वस्तु लिन्छन्, त पूरा लिन्छन् तथा जब अरूलाई नाप-तौल गर्दछन् त कम गरेर दिन्छन् ।" (सूर:मुतफ़्फ़ेफीन)

[4]अल्लाहको अवज्ञाले, विशेषरूपले जसको सम्बन्ध व्यक्तिको अधिकारसित छ, जस्तै यहाँ नाप-तौलमा कमी अधिकतामा छ, धर्तीमा अवश्य बिगाड तथा उपद्रव उत्पन्न हुन्छ जसबाट उनीहरूलाई रोकिएको छ ।

عَلَيۡكُم بِحَفِيظٖ ۝٨٦

तिमी ईमान्दार हौ ।[1] म कुनै तिम्रो संरक्षक (तथा अधिकारी) होइन ।[2]

قَالُواْ يَٰشُعَيۡبُ أَصَلَوٰتُكَ تَأۡمُرُكَ أَن نَّتۡرُكَ مَا يَعۡبُدُ ءَابَآؤُنَآ أَوۡ أَن نَّفۡعَلَ فِيٓ أَمۡوَٰلِنَا مَا نَشَٰٓؤُاْۖ إِنَّكَ لَأَنتَ ٱلۡحَلِيمُ ٱلرَّشِيدُ ۝٨٧

(८७) उनीहरूले उत्तर दिए कि हे शोएब ! के तिम्रो सलात[3] ले तिमीलाई यही आदेश दिन्छ कि हामी आफ्ना पूर्वजका देवताहरूलाई छाडिदेऔं तथा हामी आफ्नो मालमा जे गर्न चाहन्छौं, त्यसलाई गर्न पनि छाडिदेऔं ।[4] तिमी त अति सम्मानित तथा सत्कर्मी हौ ।[5]

قَالَ يَٰقَوۡمِ أَرَءَيۡتُمۡ إِن كُنتُ عَلَىٰ بَيِّنَةٖ مِّن رَّبِّي وَرَزَقَنِي مِنۡهُ رِزۡقًا حَسَنٗاۚ وَمَآ أُرِيدُ أَنۡ أُخَالِفَكُمۡ

(८८) उनले भने कि हे मेरा समुदाय ! हेर त, यदि मैले आफ्नो प्रभुतिरबाट प्रत्यक्ष प्रमाण लिएको छु तथा उसले आफ्नो पासबाट उत्तम

---

[1](بقيّت الله) सित तात्पर्य त्यो लाभ हो जुन नाप-तौलमा कुनै प्रकारको कमी नगरीकन ईमान्दारीका साथ सौदा दिए पश्चात प्राप्त हुन्छ । किनभने यो हलाल (वैध) तथा पवित्र छ तथा पुण्य एवं शुभ पनि यसैमा छ, यसकारण अल्लाहको शेष भनिएको छ ।

[2]अर्थात् म तिमीलाई मात्र सावधान तथा सतर्क गर्नसक्छु तथा त्यो अल्लाहको आदेशले गरिराखेको छु । तर नराम्रा कुराहरूबाट तिमीलाई रोकिदेऊ अथवा त्यसबापत दण्ड देउँ, यो मेरो अधिकारमा छैन । यी दुबै कुराको अधिकार मात्र अल्लाहलाई छ ।

[3](صلوٰة) सित तात्पर्य उपासना, धर्म अथवा कुर्आन पढ्नु हो ।

[4]यसबाट तात्पर्य केही व्याख्याकारहरूका निकट ज़कात तथा दान हो जसको आदेश प्रत्येक दैवी धर्महरूमा दिइएको छ । अल्लाहको आदेशबाट ज़कात तथा दान दिनु, अल्लाहका अवज्ञाकारीहरूलाई कष्टदायक हुन्छ तथा उनीहरू ठान्दछन् कि जब हामी आफ्नो परिश्रम तथा योग्यताले माल कमाउँछौं, त त्यसलाई खर्च गर्न अथवा नगर्नमा हामीमाथि प्रतिबन्ध किन हुन्छ ? तथा त्यसको एउटा निर्धारित भाग निकाल्नमा हामीलाई बाध्य किन गरिन्छ ? यसैप्रकारले कमाइ तथा व्यापारमा वैध तथा अवैध एवं उचित तथा अनुचितको प्रतिबन्ध पनि यस्ता मानिसहरूलाई अत्यन्त कष्टप्रद लाग्दछ । सम्भव छ कि नाप-तौलमा कमीबाट रोक्नलाई पनि उनीहरूले आफ्ना अर्थ-उपभोगमा हस्तक्षेप ठानेका हुन् । तथा यी शब्दहरूमा त्यसलाई अस्वीकार गरेका हुन् । यसका दुबै भावार्थ उचित छन् ।

[5]आदरणीय शोएबका लागि यी शब्द उनीहरूले उपहासको रूपमा प्रयोग गरे ।

إِلَىٰ مَآ أَنْهَىٰكُمْ عَنْهُ ۚ إِنْ أُرِيدُ إِلَّا ٱلْإِصْلَـٰحَ مَا ٱسْتَطَعْتُ ۚ وَمَا تَوْفِيقِىٓ إِلَّا بِٱللَّهِ ۚ عَلَيْهِ تَوَكَّلْتُ وَإِلَيْهِ أُنِيبُ ﴿٨٨﴾

जीविका दिएको छ,[1] मेरो कदापि यो इच्छा होइन कि तिम्रो विरोध गरेर स्वयं त्यस वस्तुतिर प्रवृत्त होउ, जसबाट तिमीलाई रोकिराखेको छु,[2] मेरो विचार त आफ्नो शक्तिले भ्याएसम्म सुधार गर्नु नै हो ।[3] तथा मेरो सन्मति अल्लाहकै सहायताले हो,[4] उसैमाथि मेरो भरोसा छ तथा उसैतिर म आकर्षित छु ।

وَيَـٰقَوْمِ لَا يَجْرِمَنَّكُمْ شِقَاقِىٓ أَن يُصِيبَكُم مِّثْلُ مَآ أَصَابَ قَوْمَ نُوحٍ أَوْ قَوْمَ هُودٍ أَوْ قَوْمَ صَـٰلِحٍ ۚ وَمَا قَوْمُ لُوطٍ مِّنكُم بِبَعِيدٍ ﴿٨٩﴾

(८९) तथा मेरा समुदाय (का मानिसहरू) ! कहीं यस्तो नहोस् कि तिमी मेरो विरोधमा आएर ती यातनाहरूको पात्र होऊ, जुन नूहको समुदाय तथा हूदको समुदाय एवं स्वालेहको समुदायलाई आयो ।[5] तथा लूतको समुदाय त तिमीबाट अलिकति पनि टाढा छैन ।

وَٱسْتَغْفِرُوا۟ رَبَّكُمْ ثُمَّ تُوبُوٓا۟ إِلَيْهِ ۚ إِنَّ رَبِّى رَحِيمٌ وَدُودٌ ﴿٩٠﴾

(९०) तथा तिमी आफ्नो प्रभुसित क्षमा-याचना गर तथा उसैतिर प्रवृत्त होऊ, विश्वास गर कि मेरो प्रभु अत्याधिक कृपालु एवं अत्याधिक प्रेम गर्ने हो ।

---

[1] उत्तम जीविकाको दोस्रो अर्थ नबूअत पनि वर्णन गरिएको छ ।

[2] अर्थात् जुन कामबाट म तिमीलाई रोक्दछु, तिमीबाट लुकेर, त्यो म स्वयं गरूँ, यस्तो हुन सक्दैन ।

[3] म तिमीलाई जुन काम गर्न अथवा जसबाट रोकिनुको आदेश दिन्छु, यसबाट उद्देश्य आफ्नो शक्तिभरी तिम्रो सुधार नै हो ।

[4] अर्थात् सत्यसम्म पुग्ने जुन मेरो लक्ष्य छ, त्यो अल्लाहकै इच्छाबाट सम्भव छ, यसकारण सबै कुराहरूमा मेरो भरोसा उसैमाथि छ तथा उसैतिर म ध्यान केन्द्रित गर्दछु ।

[5] अर्थात् उनको स्थान तिमीभन्दा टाढा छैन, अथवा त्यसकारण म तिमीबाट टाढा छैन, जुन उनीमाथि प्रकोपको कारण बन्यो ।

قَالُوا۟ يَـٰشُعَيْبُ مَا نَفْقَهُ كَثِيرًا مِّمَّا تَقُولُ وَإِنَّا لَنَرَىٰكَ فِينَا ضَعِيفًا ۖ وَلَوْلَا رَهْطُكَ لَرَجَمْنَـٰكَ ۖ وَمَآ أَنتَ عَلَيْنَا بِعَزِيزٍ ﴿٩١﴾

(९१) उनीहरूले भने हे शोएब ! तिम्रा अधिकांश कुरा हाम्रो बुद्धिमा आउँदैनन्[१] तथा हामी त तिमीलाई आफूभित्र निकै निर्बल पाउँछौं ।[२] यदि तिम्रो कबीलाको आदरको कुरा नभएको भए हामी त तिमीलाई ढुङ्गा प्रहार गर्थ्यौं,[३] तथा हामीले तिमीलाई कुनै सम्मानित व्यक्ति ठान्दैनौं ।[४]

قَالَ يَـٰقَوْمِ أَرَهْطِىٓ أَعَزُّ عَلَيْكُم مِّنَ ٱللَّهِ وَٱتَّخَذْتُمُوهُ وَرَآءَكُمْ ظِهْرِيًّا ۖ إِنَّ رَبِّى بِمَا تَعْمَلُونَ مُحِيطٌ ﴿٩٢﴾

(९२) उनले उत्तर दिए कि हे मेरा समुदायका मानिसहरू ! के तिमी छेउ मेरा कबीलाका मानिसहरू अल्लाहभन्दा पनि अधिक सम्मानित छन् कि तिमीले उसलाई पिठ्यूँ पछाडी पारिदिएका छौ ।[५]

[१]यो या त उनीहरूले उपहास स्वरूप तथा अपमानको लागि भने, जबकि कुरा द्विबोध थिएनन् । यस अवस्थामा बोधको इन्कार अवास्तविक हुनेछ अथवा उनको उद्देश्य ती कुराहरूलाई बुझ्नबाट विवशता व्यक्त गर्नु हो जसको सम्वन्ध परोक्षसित छ, जस्तै मृत्यु पश्चात जीवित हुनु, कयामतको निर्णय तथा न्याय, स्वर्ग-नरक आदि । यस आधारमा समझ असमर्थता वास्तविक हुनेछ ।

[२]यो निर्वलता शारीरिक आधारमा थियो, जस्तो कि केही विद्वानहरूको विचार छ कि आदरणीय शोएवको दृष्टि कमजोर थियो अथवा उनी क्षीण तथा शारीरिक रूपले कमजोर थिए अथवा यस आधारमा उनलाई कमजोर भनियो कि उनी स्वयं पनि विरोधीहरूको एक्लै सामना गर्ने शक्ति राख्दैनथे ।

[३]भनिन्छ कि आदरणीय शोएवको वंश उनको सहायक थिएन, तर त्यो कबीला कुफ्र (अधर्म) तथा शिर्कमा आफ्नो समुदायको साथमा थियो, अत: आफ्नो सहधर्मी हुनको कारण त्यस जातिको आदर, अन्तत: आदरणीय शोएबसँग कडा व्यवहार तथा उनलाई हानि पुऱ्याउनमा बाधक थियो ।

[४]परन्तु तिम्रो कबीलाको सम्मान कुनै पनि प्रकारले हाम्रा हृदयमा छ, यसकारण हामी तिमीलाई छोडिराखेका छौं ।

[५]कि तिमी मलाई मेरो जातिका कारण मलाई क्षमा गरिराखेका छौ । परन्तु जुन अल्लाहले मलाई नबूअतको सम्मानले विभूषित गरेको छ, त्यसको कुनै सम्मान तथा पदको गरिमाको कुनै आदर तिम्रा हृदयमा छैन तथा तिमीले त्यसलाई पिठ्यूँ पछाडी पारिदिएका छौ । यहाँ आदरणीय शोएबले ﴿أَعَزُّ عَلَيْكُم مِّنَ ٱللَّهِ﴾ (अल्लाहभन्दा अधिक आदरणीय) भने जसबाट यो भन्नु उद्देश्य हो कि नबीको उपहास वास्तवमा

निःसन्देह मेरो प्रभुले जे-जति तिमीले गरिराखेका छौ, सबैलाई घेरेको छ ।

وَيٰقَوْمِ اعْمَلُوْا عَلٰى مَكَانَتِكُمْ اِنِّيْ عَامِلٌ ۭ سَوْفَ تَعْلَمُوْنَ ۙ مَنْ يَّاْتِيْهِ عَذَابٌ يُّخْزِيْهِ وَمَنْ هُوَ كَاذِبٌ ۭ وَارْتَقِبُوْٓا اِنِّيْ مَعَكُمْ رَقِيْبٌ ﴿٩٣﴾

(९३) तथा हे समुदायिक (भाईहरू) ! अब तिमी आफ्नो स्थानमा काम गर्दै जाउ, म पनि काम गरिराखेको छु, तिमीलाई निकटमा ज्ञान भइहाल्नेछ कि कसको पासमा त्यो यातना आउनेछ, जुन त्यसलाई अपमानित गर्दछ तथा को हो जो भूठा छ ? तिमी प्रतीक्षा गर तथा म पनि तिमीसँग प्रतिक्षा गर्दैछु ।[1]

وَلَمَّا جَاۗءَ اَمْرُنَا نَجَّيْنَا شُعَيْبًا وَّالَّذِيْنَ اٰمَنُوْا مَعَهٗ بِرَحْمَةٍ مِّنَّا وَاَخَذَتِ الَّذِيْنَ ظَلَمُوا الصَّيْحَةُ فَاَصْبَحُوْا فِيْ دِيَارِهِمْ جٰثِمِيْنَ ﴿٩٤﴾ۙ

(९४) तथा जब हाम्रो आदेश (प्रकोप) आईपुग्यो, हामीले शोएबलाई तथा उनका साथ सबै निष्ठावानहरूलाई आफ्नो विशेष कृपाले मुक्ति प्रदान गऱ्यौं तथा अत्याचारीहरूलाई तिखो ध्वनिको यातनाले आई समात्यो,[2] जसले गर्दा उनी आफ्ना घरहरूमा घोप्टो परेको अवस्थामा शेष भइहाले ।

अल्लाहको उपहास हो यस कारण कि नवी अल्लाहको दूत हुन्छ । तथा यसै आधारमा अव सत्यवादी आलिमहरू (धर्म ज्ञानीहरू) को अपमान तथा उनको हीनता, यो अल्लाहको धर्मको अपमान तथा त्यसको हीनता हो, यस कारण कि यिनीहरू अल्लाहको धर्मका प्रतिनिधि हुन् واتخذتموه मा सर्वनामको संकेत अल्लाहतिर छ तथा अर्थ यो हो कि अल्लाहको त्यस मामिलालाई लिएर उसले मलाई पठाएको छ, त्यसलाई तिमीले अपमानित गरिदिएका छौ तथा त्यसको तिमीले कुनै चिन्ता गरेनौ ।

[1]जब उनले देखे कि यो समुदाय आफ्नो कुफ्र (अविश्वास) तथा अनेकेश्वरबादमा अडिग छ तथा शिक्षा-दीक्षाको पनि कुनै प्रभाव भइराखेको छैन त त्यसो भए तिमी आफ्नो मार्गमा हिंड्दै गर, निकटमा नै तिमीलाई सत्य-असत्यको तथा यस कुराको कि अपमानित गर्ने प्रकोपको अधिकारी को छ ज्ञान भइहाल्नेछ ।

[2]यसै चिच्याहट चित्कारबाट उनका हृदय छत-विक्षत भइहाले तथा उनी मरिहाले, त्यसको पश्चात भूकम्प पनि आयो, जस्तो कि सूरः आराफ-९१ तथा सूरः अनकबूत-३७ मा छ ।

كَأَن لَّمْ يَغْنَوْا فِيهَا ۗ أَلَا بُعْدًا لِّمَدْيَنَ كَمَا بَعِدَتْ ثَمُودُ ﴿٩٥﴾

(९५) मानौं कि उनी ती घरहरूमा कहिल्यै बसेकै थिएनन्, सावधान रह, मदयनको लागि पनि त्यस्तै दूरी होस्[1] जस्तो दूरी समूदको भयो ।

وَلَقَدْ أَرْسَلْنَا مُوسَىٰ بِآيَاتِنَا وَسُلْطَانٍ مُّبِينٍ ﴿٩٦﴾

(९६) तथा निश्चय नै हामीले मूसालाई आफ्ना आयत तथा ज्योर्तिमय प्रमाणहरूका साथ पठाएका थियौं ।[2]

إِلَىٰ فِرْعَوْنَ وَمَلَئِهِ فَاتَّبَعُوا أَمْرَ فِرْعَوْنَ ۖ وَمَا أَمْرُ فِرْعَوْنَ بِرَشِيدٍ ﴿٩٧﴾

(९७) फिरऔन तथा त्यसका नाइकेहरूतिर[3] तैपनि उनीहरूले फिरऔनका आदेशहरूको पालन गरे तथा फिरऔनको कुनै आदेश उचित तथा ठीक छँदै थिएन ।[4]

يَقْدُمُ قَوْمَهُ يَوْمَ الْقِيَامَةِ فَأَوْرَدَهُمُ

(९८) त्यो त केयामत (प्रलय) का दिन आफ्नो जातिको अगुवा बनेर ती सबैलाई नरक

---

[1]अर्थात् धिक्कार, झपार, अल्लाहको कृपाबाट बञ्चित तथा दूरी ।

[2]'आयात' बाट केही ज्ञानीहरूका निकट धर्मशास्त्र (तौरात) तथा 'सुल्तानिम मोबीन' बाट चमत्कार तात्पर्य छ तथा केहीका निकट 'आयत' बाट 'नौ निशानीहरू तथा 'सुल्तानिम मोबीन' (ज्योर्तिमय प्रमाण) बाट छडी तात्पर्य छ । छडी यद्यपि 'नौ निशानीहरू' मा सम्मिलित छ, परन्तु यो चमत्कार अत्याधिक भव्य थियो, यस कारण विशेषरूपले वर्णन गरिएको छ ।

[3](ملأ) समुदायका सम्मानित तथा श्रेष्ठ मानिसहरूलाई भनिदैछ । (यसको व्याख्या अघि नै गुज्रिसकेको छ) फ़िरऔनका साथ, त्यसका सदनका सम्मानित मानिसहरूका नाम यसकारण लिइएको छ कि समुदायका सम्मानित नै हरेक कुराको उत्तरदायी हुने गर्दथे । तथा समुदाय उनैको पछाडी हिंड्थ्यो । यदि यिनीहरू आदरणीय मूसामा निष्ठावान भए त निःसन्देह फ़िरऔनको सारा समुदायले ईमान स्थापित गर्ने थियो ।

[4](رَشِيدٍ) को अर्थ निर्देशित हो । अर्थात् कुरा त आदरणीय मूसाको दीक्षा तथा निर्देशनको थियो, परन्तु त्यसलाई उनीहरूले रद्द गरिदिए तथा फ़िरऔनको कुरा जुन दीक्षा तथा निर्देशनबाट टाढा थियो, त्यसको उनीहरूले अनुकरण गरे ।

النَّارَ وَبِئْسَ الْوِرْدُ الْمَوْرُودُ ﴿٩٨﴾

मा लगी उभ्याउनेछ,[१] त्यो अत्याधिक नराम्रो घाट हो,[२] जहाँ ल्याई उभ्याइने छन्।

وَأُتْبِعُوا فِي هَٰذِهِ لَعْنَةً وَيَوْمَ الْقِيَامَةِ ۚ بِئْسَ الرِّفْدُ الْمَرْفُودُ ﴿٩٩﴾

(९९) तथा उनीमाथि यस लोकमा पनि तिरस्कार भयो तथा कयामतका दिन पनि[३] कति नराम्रो पुरस्कार हो, जुन दिइयो।[४]

ذَٰلِكَ مِنْ أَنْبَاءِ الْقُرَىٰ نَقُصُّهُ عَلَيْكَ ۖ مِنْهَا قَائِمٌ وَحَصِيدٌ ﴿١٠٠﴾

(१००) वस्तीहरूका यी केही समाचार जुन हामीले तिम्रा समक्ष वर्णन गरिराखेका छौं, उनीहरूमध्ये केही विद्वमान छन् तथा केही पूर्णतः ध्वस्त भइसकेका छन्।[५]

وَمَا ظَلَمْنَاهُمْ وَلَٰكِنْ ظَلَمُوا

(१०१) तथा हामीले उनीमाथि कुनै अत्याचार गरेनौं,[६] बरू स्वयं उनीहरूले नै आफू

[१]अर्थात् फ़िरऔन जसरी संसारमा त्यसको अगुवा तथा नाइके थियो, केयामतका दिन पनि यो अघि-अघि नै हुनेछ तथा आफ्नो समुदायलाई आफ्नो नेतृत्वमा नरकमा लिएर जानेछ।

[२](ورد) पानीको घाटलाई भन्दछन् जहाँ तिर्खालु गई आफ्नो तिर्खा मेटाउँछन्। तर यहाँ नरकलाई (ورد) भनिएको छ। (مورود) त्यो स्थान अथवा घाट अर्थात् नरक जसमा मानिसहरू लगिने छन् अर्थात् स्थान पनि नराम्रो तथा जानेहरू पनि नराम्रा।

[३](لعنة) बाट तात्पर्य धिक्कार तथा अल्लाहको दयाबाट दूरी तथा बञ्चित हुनु हो, जस्तो कि संसारमा पनि उनी अल्लाहको कृपाबाट बञ्चित तथा आख़िरत (परलोक) मा पनि त्यसबाट बञ्चित नै रहनेछन्।

[४](رفد) परितोषिक तथा उपहारलाई भनिन्छ। यहाँ धिक्कारलाई (رفد) भनिएको छ। यसैकारण यसलाई नराम्रो उपहार भनिएको छ। (مرفود) सित तात्पर्य त्यो उपहार हो जुन कसैलाई दिइन्छ। यो (الرفد) माथि जोड दिनको लागि हो।

[५](قائم) सित तात्पर्य ती वस्तुहरू जुन आफ्ना छतहरूमा स्थिर छन्। तथा (محصود–حصيد) का अर्थहरूमा प्रयोग भएको छ, जसबाट तात्पर्य ती वस्तीहरू जुन काटिएका खेतीहरूका समान ध्वस्त भइहाले। अर्थात् जुन पूर्वोक्त वस्तीहरू (नगर) को कथाको चर्चा हामीले गरिराखेका छौं। उनीहरूमध्ये केही त अहिले पनि विद्यमान छन् जसका अवशेष शिक्षा प्राप्ति गर्नका लागि चिन्ह शेष रहेको छ।

[६]उनलाई प्रकोप तथा विनाशमा पारेर।

أَنفُسَهُمْ فَمَا أَغْنَتْ عَنْهُمْ آلِهَتُهُمُ الَّتِي يَدْعُونَ مِن دُونِ اللَّهِ مِن شَيْءٍ لَّمَّا جَاءَ أَمْرُ رَبِّكَ ۖ وَمَا زَادُوهُمْ غَيْرَ تَتْبِيبٍ ﴿١٠١﴾

माथि अत्याचार गरे,[1] तथा उनीहरूलाई उनका देवताहरूले कुनै लाभ पुऱ्याएनन्, जसलाई उनीहरूले अल्लाहका अतिरिक्त पुकार्दथे, जबकि तिम्रो प्रभुको आदेश आइपुग्यो। बरू उनले झन् उनको हानिलाई बढाइदिए ।[2]

وَكَذَٰلِكَ أَخْذُ رَبِّكَ إِذَا أَخَذَ الْقُرَىٰ وَهِيَ ظَالِمَةٌ ۚ إِنَّ أَخْذَهُ أَلِيمٌ شَدِيدٌ ﴿١٠٢﴾

(१०२) तथा तिम्रो प्रभुको पकडको यही नियम हो, जबकि त्यसले वस्तीहरूमा बास गर्ने अत्याचारीहरूलाई समात्छ, नि:सन्देह उसको पकड दुखदायी एवं अत्यन्त कडा छ ।[3]

إِنَّ فِي ذَٰلِكَ لَآيَةً لِّمَنْ خَافَ عَذَابَ الْآخِرَةِ ۚ ذَٰلِكَ يَوْمٌ مَّجْمُوعٌ

(१०३) नि:सन्देह यसमा[4] ती मानिसहरूका लागि शिक्षाप्रद चिन्ह छ, जो केयामत (प्रलय) को यातनासित तर्सन्छन् । त्यस दिन जब सब

---

[1]अधर्म तथा अवज्ञाकारिता गरेर ।

[2]जबकि उनको विश्वास यो थियो कि यिनी उनीहरूलाई हानिबाट बचाउने छन् तथा लाभ पुऱ्याउनेछन् । तर जब अल्लाहको प्रकोप आयो, त्यो स्पष्ट भइहाल्यो कि उनको यो अन्धविश्वास थियो तथा त्यो कुरो सिद्ध भयो कि अल्लाहका अतिरिक्त कोही कसैलाई लाभ-हानि पुऱ्याउने सामर्थ्य राख्दैन ।

[3]अर्थात् जसरी अल्लाहले प्राचीन वस्तीहरूलाई ध्वस्त गरिदियो, भविष्यमा पनि त्यो अत्याचारीहरूलाई यसैप्रकार समात्ने सामर्थ्य राख्दछ । हदीसमा वर्णित छ, नबी सल्लल्लाहु अलैह वसल्लमले भन्नुभयो :

إِنَّ اللهَ لَيُمْلِي لِلظَّالِمِ، حَتَّى إِذَا أَخَذَهُ لَمْ يُفْلِتْهُ

"अल्लाह तआला नि:सन्देह अत्याचारीहरूलाई अवसर दिन्छ । तर जब उसलाई समात्न चाहन्छ त यसैप्रकार सहसा गर्दछ कि फेरि अवसर दिंदैन ।"

अनि नबी सल्लल्लाहु अलैहि वसल्लमले यही आयत (मन्त्र) पढ्नुभयो । (सहीह बुखारी किताबुल तफ़सीर, सूर: हूद, मुस्लिम किताबुल बिर्रे वस्सिल:, बाबु तहरीमिज़्ज़ुल्मे)

[4]अर्थात् अल्लाहको पकडमा अथवा ती घटनाहरूमा जुन शिक्षा एवं उपदेशको लागि वर्णन गरिएका छन् ।

لِّمَّا النَّاسُ وَذَٰلِكَ يَوْمٌ مَّشْهُودٌ ﴿١٠٣﴾

मानिसहरू एकत्रित गरिनेछन् तथा त्यो त्यस्तो दिन हो जसमा सबै उपस्थित गरिनेछन् ।[1]

وَمَا نُؤَخِّرُهُ إِلَّا لِأَجَلٍ مَّعْدُودٍ ﴿١٠٤﴾

(१०४) तथा त्यसलाई हामीले जुन स्थगन गर्दछौं, त्यो मात्र एउटा निर्धारित समयसम्मको लागि हो ।[2]

يَوْمَ يَأْتِ لَا تَكَلَّمُ نَفْسٌ إِلَّا بِإِذْنِهِ ۚ فَمِنْهُمْ شَقِيٌّ وَسَعِيدٌ ﴿١٠٥﴾

(१०५) जुन दिन त्यो आइपुग्ने छ, कसैलाई साहस हुनेछैन कि अल्लाहको अनुमति बिना कुनै पनि कुरा गर्न सकोस्,[3] अनि त्यसमा कोही दूर्भाग्यशाली हुनेछ तथा कोही भाग्यशाली ।

فَأَمَّا الَّذِينَ شَقُوا فَفِي النَّارِ لَهُمْ فِيهَا زَفِيرٌ وَشَهِيقٌ ﴿١٠٦﴾

(१०६) तर जो दूर्भाग्यशाली हुन्छन् उनीहरू नरकमा हुनेछन्, त्यहाँ उनीहरूले रोदन-चीत्कार गर्नेछन् ।

[1]अर्थात् आदिदेखि अन्त्यसम्मका सबै मानिस एकत्र हुनेछन् । कोही शेष रहने छैन ।

[2]अर्थात् केयामत (प्रलय) का दिनमा विलम्बको कारण यो हो कि अल्लाह तआलाले त्यसको लागि एउटा दिन निर्धारित गरिसकेको छ । जब त्यो निर्धारित समय आइपुग्छ त एक क्षणको पनि विलम्ब हुनेछैन ।

[3]वार्तालाप नगर्नुबाट तात्पर्य, कसैलाई अल्लाह तआलाबाट तर्क-वितर्कको अथवा सिफारिश गर्नुको साहस हुनेछैन, त्यस अवस्थाका अतिरिक्त कि उसले अनुमति प्रदान गरोस् । सिफारिस (अभिस्तावना) को सम्बन्धमा एउटा हदीसमा छ । रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

وَلَا يَتَكَلَّمُ يَوْمَئِذٍ إِلَّا الرُّسُلُ، وَدَعْوَى الرُّسُلِ يَوْمَئِذٍ ، اَللّٰهُمَّ سَلِّمْ سَلِّمْ

"त्यसदिन नबीहरूबाहेक कसैलाई वार्तालापको साहस हुनेछैन तथा नबीहरूको मुखमा त्यसदिन पनि मात्र यही हुनेछ कि हे अल्लाह ! हामीलाई बचाईहाल ।" (सहीह बुख़ारी किताबुल ईमान, बाब फ़जलिस्सुजूद, तथा मुस्लिम किताबुल ईमान, बाबु मारिफ़त तरीकिर्रूय:)

(१०७) उनीहरू त्यही सधैं रहनेछन्, जबसम्म आकाश तथा धर्ती स्थापित रहन्छन्,[1] त्यस समय बाहेक जुन तिम्रो प्रभुको इच्छा हुन्छ ।[2] निःसन्देह तिम्रो प्रभुले जे चाहन्छ, गरेर छाड्छ ।

خٰلِدِيْنَ فِيْهَا مَا دَامَتِ السَّمٰوٰتُ وَالْاَرْضُ اِلَّا مَا شَآءَ رَبُّكَ ؕ اِنَّ رَبَّكَ فَعَّالٌ لِّمَا يُرِيْدُ ۝

[1]यी शब्दहरूबाट केही मानिसहरूमा यो भ्रम भएको छ कि काफ़िरहरूका लागि नरकको यातना स्थायी छैन, बरू एउटा समयसम्म छ अर्थात् जबसम्म धर्ती तथा आकाशको अस्तित्व रहने छ। परन्तु यो कुरा सही होइन किनभने यहाँ (ما دامت السموات والأرض) अरबवासीहरूका दैनिक बोलचाल तथा उखानको अनुसार उत्रेको छ। अरबहरूको यो बानी थियो कि जब कुनै वस्तुको स्थायित्व निर्धारित गर्नुको उद्देश्य हुन्थ्यो त भन्दथे (هذا دائم دوام السموات والارض) यो वस्तु त्यसैप्रकार नित्य रहनेछ जसरी आकाश तथा धर्ती नित्य छ। यस वाक्य शैलीलाई कुर्आन करीममा प्रयोग गरिएको छ, जसको अर्थ यो हो कि काफ़िर तथा मूर्तिपूजक नरकमा सधैं रहनेछ, जसलाई कुर्आन करीममा विभिन्न स्थानहरूमा (خالدين فيها أبداً) का शब्दहरूमा वर्णन गरिएको छ। एउटा अन्य अर्थ यो पनि वर्णन गरिएको छ कि आकाश तथा धर्तीसँग तात्पर्य संसारका आकाश तथा धर्ती होइनन्, जुन ध्वस्त भइहाल्नेछन्, परन्तु परलोकका आकाश तथा धर्ती होइनन्, जुन ध्वस्त हुने छन्, परन्तु परलोकका आकाश तथा धर्ती हुन् जो यसभन्दा भिन्न हुनेछन् जस्तो कि कुर्आन करीममा यसको वर्णन छ।

﴿يَوْمَ تُبَدَّلُ الْأَرْضُ غَيْرَ الْأَرْضِ وَالسَّمٰوٰتُ﴾

"त्यस दिन यो धर्ती अन्य धर्तीमा बदलिने छ तथा आकाश पनि (परिवर्तन गरिदिइने छन्)" (सूरः इब्राहीम-४८)

तथा आख़िरत (परलोक) का यी धर्ती तथा आकाश स्वर्ग तथा नरकको जस्तै सधैं रहनेछ, यस आयतमा यही आकाश तथा धर्ती तात्पर्य छ, न कि संसारका धर्ती तथा आकाश, जुन ध्वस्त भइहाल्नेछन्। (इब्ने कसीर) यी दुवै भावार्थहरूमध्ये कुनै पनि भावार्थ लिंदा आयतको भावार्थ स्पष्ट हुनजान्छ तथा त्यो भ्रम उत्पन्न हुँदैन, जुन वर्णित भएको छ । इमाम शौकानीले यसका अन्य कैयन् भावार्थ वर्णन गरेका छन्, जसलाई ज्ञान भएकाले हेर्न सक्छन् । (फ़तहुल क़दीर)

[2]यस अनिवर्धतका पनि कैयन् भावार्थ वर्णन गरिएका छन्। यिनीहरूमा सर्वाधिक सही भावार्थ यही हो कि यो निवन्धन ती पापीहरूको लागि हो, जो एकेश्वरवादी तथा ईमान भएका हुनेछन्। यस आधारमा यसभन्दा पूर्वको आयतमा (شقيّ) को शब्द साधारणतः अर्थात् काफ़िर तथा अवज्ञाकारी दुवैलाई सम्मिलित हुनेछ तथा (إلا ماشآء ربك) सित आज्ञाकारी ईमानवाला अलग्ग हुनेछन् । तथा (ماشآء) मा (ما) शब्द (مَن) को अर्थमा छ ।

وَأَمَّا ٱلَّذِينَ سُعِدُواْ فَفِي ٱلْجَنَّةِ خَٰلِدِينَ فِيهَا مَا دَامَتِ ٱلسَّمَٰوَٰتُ وَٱلْأَرْضُ إِلَّا مَا شَآءَ رَبُّكَ ۖ عَطَآءً غَيْرَ مَجْذُوذٍ ﴿١٠٨﴾

(१०८) तथा जो भाग्यशाली गरिए, उनीहरू स्वर्गमा हुनेछन् जहाँ उनी सधैं रहनेछन् जबसम्म आकाश तथा धर्ती शेष रहन्छन्, कुरो यो छ कि तिम्रो प्रभु कै इच्छा चल्छ ।[१] यो असीम वरदान हो ।[२]

فَلَا تَكُ فِي مِرْيَةٍ مِّمَّا يَعْبُدُ هَٰٓؤُلَآءِ ۚ مَا يَعْبُدُونَ إِلَّا كَمَا يَعْبُدُ ءَابَآؤُهُم مِّن قَبْلُ ۚ وَإِنَّا لَمُوَفُّوهُمْ نَصِيبَهُمْ غَيْرَ مَنقُوصٍ ﴿١٠٩﴾

(१०९) यसकारण तपाईं ती कुराबारे शंका तथा सन्देहमा नरहनुस्, जसलाई यिनीहरूले पूजिराखेका छन् । उनीहरूको पूजा त त्यस्तै छ, जसरी यिनका बावु-बाजेले गर्दै आइरहेका छन् । हामीले ती सबैलाई पूरा-पूरा भाग कमी न गरिकन दिने नै छौं ।[३]

وَلَقَدْ ءَاتَيْنَا مُوسَى ٱلْكِتَٰبَ فَٱخْتُلِفَ فِيهِ ۚ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِن رَّبِّكَ لَقُضِيَ بَيْنَهُمْ ۚ

(११०) निःसन्देह हामीले मूसालाई किताब प्रदान गर्‍यौं । त्यस पश्चात त्यसमा मतभेद गरियो ।[४] यदि अघि नै तपाईंको प्रभुको कुरा लागू नभएको भए उनको निर्णय गरी

[१]यो निबन्धन पनि आज्ञाकारी ईमान भएका लागि हुन् । अर्थात् अन्य स्वर्गमा जानेहरूको जस्तै यी अवज्ञाकारी ईमान भएकाहरू पनि सधैं स्वर्गमा रहेको हुने छैनन् । बरू प्रारम्भमा केही समय प्रारम्भमा नरकमा व्यतीत गर्नेछन्, त्यस पश्चात नबी तथा ईमान भएकाहरूको सिफारिशले नरकबाट निकालिएर स्वर्गमा हालिनेछन्, जस्तो कि सहीह हदीसबाट यी कुरा सिद्ध छन् ।

[२](غير مجذوذ) को अर्थ हो अनन्त असीम कृपा । यस वाक्यबाट यो स्पष्ट हुन्छ कि जुन पापीहरूलाई नरकबाट निकालेर स्वर्गमा हालिनेछ यो प्रवेश अस्थाई होइन, स्थायी हुनेछ, तथा सबै स्वर्गवासी सधैं अल्लाहको प्रदान एवं अनुकम्पाहरूको आनन्द लिंदै रहनेछ । त्यसमा कुनै टुट हुनेछैन ।

[३]यसबाट तात्पर्य त्यो प्रकोप हो जसका उनी अधिकारी हुनेछन्, यसमा कुनै कमी गरिने छैन ।

[४]अर्थात् कसैले यस किताबलाई माने कसैले मानेनन् । यो नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिइँदैछ कि पूर्वका नबीहरूसँग पनि यही व्यवहार हुँदै आएको छ, केही मानिसहरू उनीमाथि ईमान कायम गर्नेहरू हुन्थे तथा केही अन्य झुट्लाउनेहरूमा हुन्थे । यसकारण तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) आफू यस झुट्लाइने कुराको चिन्ता नगर्नुस् ।

وَإِنَّهُمْ لَفِي شَكٍّ مِّنْهُ مُرِيبٍ ﴿١١٠﴾

दिइन्थ्यो,[1] उनीहरूलाई त यसमा शंका लागिराखेको छ (उनीहरू त दुबिधामा छन्)।

وَإِنَّ كُلًّا لَّمَّا لَيُوَفِّيَنَّهُمْ رَبُّكَ أَعْمَالَهُمْ ۚ إِنَّهُ بِمَا يَعْمَلُونَ خَبِيرٌ ﴿١١١﴾

(१११) तथा वस्तुतः उनीहरू मध्येबाट प्रत्येकलाई (जब उनका समक्ष जानेछ त) तपाईंको प्रभुले त्यसलाई त्यसका कर्महरूको पूरा प्रतिकार प्रदान गर्नेछ । निश्चय उनीहरू जे-जति गरिराखेका छन्, तिनीसित त्यो अवगत छ ।

فَاسْتَقِمْ كَمَا أُمِرْتَ وَمَن تَابَ مَعَكَ وَلَا تَطْغَوْا ۚ إِنَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿١١٢﴾

(११२) तसर्थ तपाईं अडिग रहनुस् जस्तो कि तपाईंलाई आदेश दिइएको छ तथा ती मानिसहरू पनि जो तपाईंका साथ (क्षमा-याचना) गरिसकेका छन् । सावधान तिमी सीमाभन्दा अगाडि नबढ्नु,[2] अल्लाह तिम्रा सारा कर्महरूलाई देखिराखेको छ ।

وَلَا تَرْكَنُوا إِلَى الَّذِينَ ظَلَمُوا فَتَمَسَّكُمُ النَّارُ وَمَا لَكُم مِّن دُونِ

(११३) तथा हेर अत्याचारीहरूतिर कदापि प्रवृत्त नहुनु अन्यथा तिमीलाई पनि अग्निको ज्वाला लागिहाल्नेछ[3] तथा अल्लाहका अतिरिक्त

[1]यसबाट तात्पर्य यो हो कि यदि अल्लाह तआलाले पहिलेदेखि नै उनीहरूका लागि यातनाको दिन निर्धारित नगरेको भए, त्यसले उनीहरूलाई तुरून्त नाश गरिदिन्थ्यो ।

[2]यस आयतमा नबी सल्लल्लाहु अलैहि वसल्लम तथा ईमानवालाहरूलाई एक त दृढ रहनुको शिक्षा दिइँदैछ, जुन शत्रुको सामना गर्नको लागि एउटा निकै ठूलो हतियार । अन्य (طغيانٌ) अर्थात (بَغيٌ) (सीमा उल्लंघन) बाट रोकिएको छ, जुन ईमानवालाहरूका लागि नैतिक शक्ति तथा उत्तम कर्मको लागि अति आवश्यक छ । यहाँसम्मकि यो उल्लघंन शत्रुका साथ व्यवहार गर्दाखेरि पनि उचित छैन ।

[3]यसको अर्थ यो हो कि अत्याचारीहरूसँग कोमलता तथा प्रशंसा गरेर उनीसित सहायता नमाग । यसबाट उनलाई यो आभास हुनेछ कि जस्तै तिमी उनका अन्य कुराहरूलाई पनि प्रिय ठान्दछौ । यसप्रकार यो तिम्रो एउटा ठूलो अपराध बन्नेछ, जुन तिमीलाई पनि उनका साथ नरकको अग्निको अधिकारी बनाउन सक्छ । यसबाट अत्याचारी राज्य अधिकारीहरूसित सम्बन्ध बनाउन पनि निषेध गर्नुको अर्थ निस्कन्छ । तर जुन कि जनहितमा हुन्छ अथवा धार्मिक लाभ प्राप्तिको

ﺍﻟﻠﻪِ مِنْ أَوْلِيَاءَ ثُمَّ لَا تُنْصَرُونَ ﴿١١٣﴾

अन्य तिम्रो सहायता गर्ने कोही हुनसक्ने छैन तथा न तिमीलाई सहायता दिइनेछ ।

وَأَقِمِ الصَّلَوٰةَ طَرَفَيِ النَّهَارِ وَزُلَفًا مِّنَ الَّيْلِ ۚ إِنَّ الْحَسَنَٰتِ يُذْهِبْنَ السَّيِّـَٔاتِ ۚ ذَٰلِكَ ذِكْرَىٰ لِلذَّٰكِرِينَ ﴿١١٤﴾

(११४) तथा दिनका दुबै अन्त्यमा विहान-बेलुका नमाज़ स्थापित राख तथा रातिका केही भागहरूमा पनि,[1] निःसन्देह पुण्य, नराम्रा कुराहरूलाई टाढा पारिदिन्छन् ।[2] यो शिक्षा हो शिक्षा ग्रहण गर्नेहरूका लागि ।

लागि हुन्छ । यस्तो अवस्थामा हृदयमा घृणा राख्दै उनीसित सम्बन्ध राख्नुको आज्ञा हुनेछ । जस्तो कि केही हदीसहरूवाट स्पष्ट छ ।

[1]दुबै किनारहरूसित तात्पर्य केही विद्वानहरूले विहानी तथा मग़रिव (सूर्यास्त), केहीले मात्र इशा (रात्रि) तथा केहीले मग़रिव (सूर्यास्त) तथा इशा दुवैको समयलाई लिएका छन् । इमाम इब्ने क़सीर भन्नुहुन्छ कि सम्भव छ दुवैको समयलाई लिएका छन् । इमाम इब्ने क़सीर भन्नुहुन्छ कि सम्भव छ कि यो आयत मेराजभन्दा पूर्व उत्रेको होला, जसमा पाँच नमाज़हरू अनिवार्य गरिए, किनभने यसभन्दा पूर्व मात्र दुईटा नमाज़ अनिवार्य थिए, एउटा सूर्योदयभन्दा पूर्व तथा एउटा सूर्यास्तभन्दा पूर्व तथा रात्रिको पछिल्लो भागमा तहज्जुदको नमाज़ । पछि तहज्जुदको नमाज़ साधारण मुसलमानहरूलाई क्षमा गरिदिइयो । अनि त्यस तहज्जुद नमाज़को अनिवार्यता केहीका अनुसार उहाँवाट पनि समाप्त गरिदिइयो । (इब्ने क़सीर)

[2]जुनप्रकार कि हदीसहरूमा पनि यसको विस्तारपूर्वक वर्णन गरिएको छ । जस्तै "पाँच नमाज़हरू" जुमअः (शुक्रवार) देखि जुमअः (शुक्रवार) सम्म तथा रमज़ानदेखि अर्को रमज़ानसम्म, यिनका मध्ये हुने पापहरूलाई समाप्त गरिदिने हुन्, यदि महापापवाट वचिन्छ" (सहीह मुस्लिम कितावुल तहारः...) एउटा अन्य हदीसमा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

> "भन ! यदि तिमीमध्ये कसैको द्वारको अगाडी एउटा ठूलो नहर बगिराखेको छ, त्यो प्रत्येक दिन त्यसमा पाँच पटक स्नान गर्दछ , के त्यसको शरीरमा त्यस पश्चात फोहोर-मैला शेष रहनेछ ।" सहावा (उहाँका सहचरहरू) ले उत्तर दिए, "होइन" उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

यसैप्रकार पाँच नमाज़हरू हुन्, उनीद्वारा अल्लाह तआला पाप तथा त्रुटिहरूलाई मिटाईदिन्छ । (सहीह बुख़ारी कितावुल मवाकीत, वावुस्सलवातित ख़मसे कफ्फ़ारतुन (तथा) मुस्लिम कितावुल मसाजिद वावुल मशये इलस्सलाते तुमहा विहिल ख़ताया व तुरफ़अ विहिद दरजातु)

وَاصْبِرْ فَإِنَّ اللَّهَ لَا يُضِيعُ أَجْرَ الْمُحْسِنِينَ ﴿١١٥﴾

(११५) तथा तपाईं धैर्य राख्नुस्। निःसन्देह अल्लाह (तआला) सदाचारीहरूको फल नष्ट गर्दैन।

فَلَوْلَا كَانَ مِنَ الْقُرُونِ مِن قَبْلِكُمْ أُولُوا بَقِيَّةٍ يَنْهَوْنَ عَنِ الْفَسَادِ فِي الْأَرْضِ إِلَّا قَلِيلًا مِّمَّنْ أَنجَيْنَا مِنْهُمْ ۗ وَاتَّبَعَ الَّذِينَ ظَلَمُوا مَا أُتْرِفُوا فِيهِ وَكَانُوا مُجْرِمِينَ ﴿١١٦﴾

(११६) त किन तिमीभन्दा पहिलाका युगका मानिसहरूमध्येबाट यस्ता परोपकारी व्यक्ति भएनन् जो धर्तीमा उपद्रव फैलाउनबाट रोक्दथे, ती थोरै मानिसहरूका अलावा जसलाई हामीले उनीहरूमध्ये मुक्ति प्रदान गरेका थियौं।[1] अत्याचारी व्यक्तिहरू त त्यस सुख-सामग्री कै पछाडि लागि रहे जसमा उनीहरूलाई सम्पन्नता दिइएको थियो र उनीहरू पापी थिए।[2]

وَمَا كَانَ رَبُّكَ لِيُهْلِكَ الْقُرَىٰ بِظُلْمٍ وَأَهْلُهَا مُصْلِحُونَ ﴿١١٧﴾

(११७) तपाईंको प्रभु यस्तो छैन कि अकारण कुनै वस्तीलाई ध्वस्त गरिदेओस् जबकि त्यहाँका मानिसहरू सदाचारी हुन्छन्।

وَلَوْ شَاءَ رَبُّكَ لَجَعَلَ النَّاسَ أُمَّةً وَاحِدَةً ۖ وَلَا يَزَالُونَ مُخْتَلِفِينَ ﴿١١٨﴾

(११८) यदि तपाईंको प्रभुले चाहेको भए त सबै व्यक्तिहरूलाई एउटा मार्गमा एउटा समुदाय गरिदिन्थ्यो। उनीहरू त सधैं विरोध गर्नेहरू नै रहनेछन्।

إِلَّا مَن رَّحِمَ رَبُّكَ ۚ وَلِذَٰلِكَ خَلَقَهُمْ ۗ وَتَمَّتْ كَلِمَةُ رَبِّكَ لَأَمْلَأَنَّ

(११९) तिनीहरूबाहेक जसमाथि तपाईंको पालनकर्ताले दया गर्दछ, उनीहरूलाई त यसैको लागि पैदा गरेको छ,[3] तथा

[1]अर्थात् पूर्वका समुदायहरूमा यस्ता भला मानिसहरू किन भएनन् जो उपद्रवी तथा दूराचारीहरूलाई उपद्रव तथा दूराचारबाट रोक्दथे ? अनि भने कि यस्ता मानिसहरू भए तर निकै थोरै जसलाई हामीले त्यस समय छाडिदियौं, जब अन्यलाई प्रकोपद्वारा ध्वस्त गरिदियौं।

[2]अर्थात् यी अत्याचारी आफ्नो अत्याचारमा अडिग रहे तथा आफ्नो गर्वमा मस्त रहे यहाँसम्मकि उनलाई प्रकोपले आई समात्यो।

[3]'यसैले' को अर्थ केही विद्वानहरूले मत्‌भेद तथा केहीले कृपा लिएका छन्। दुबै परिस्थितिहरूमा भावार्थ यो हुनेछ कि हामीले मनुष्यलाई परीक्षाका लागि पैदा गरेका हौं। जसले सत्य मार्गलाई छाडि मत्‌भेदको मार्ग अपनाउनेछ, त्यो परीक्षामा असफल तथा जसले अपनाउनेछ, त्यो सफल तथा अल्लाहको कृपाको अधिकारी हुनेछ।

جَهَنَّمَ مِنَ الْجِنَّةِ وَالنَّاسِ أَجْمَعِينَ ﴿١١٩﴾

तपाईंको प्रभुको कुरो पूर्ण छ कि म नरकलाई जिन्न तथा मानिसहरुबाट भरिदिनेछु ।[1]

وَكُلًّا نَّقُصُّ عَلَيْكَ مِنْ أَنبَاءِ الرُّسُلِ مَا نُثَبِّتُ بِهِ فُؤَادَكَ ۚ وَجَاءَكَ فِي هَٰذِهِ الْحَقُّ وَمَوْعِظَةٌ وَذِكْرَىٰ لِلْمُؤْمِنِينَ ﴿١٢٠﴾

(१२०) तथा रसूलहरुका सबै स्थितिहरु हामी तपाई समक्ष तपाईंको हृदयको सन्तोषको लागि वर्णन गरिराखेका छौं । तपाईंको पासमा यस सूरः (अंश) मा पनि सत्य पुगिसक्यो, जुन ईमान भएकाहरुका लागि शिक्षा तथा उपदेश हो ।

وَقُل لِّلَّذِينَ لَا يُؤْمِنُونَ اعْمَلُوا عَلَىٰ مَكَانَتِكُمْ إِنَّا عَامِلُونَ ﴿١٢١﴾

(१२१) तथा ईमान स्थापित नगर्नेहरुसित भनिदिनुस् कि तिमी आफ्नो स्तरबाट कर्म गर्दैजाउ, हामी पनि कर्महरुमा लीन छौं ।

وَانتَظِرُوا إِنَّا مُنتَظِرُونَ ﴿١٢٢﴾

(१२२) तथा तिमी पनि प्रतीक्षा गर, हामी पनि प्रतीक्षा गरिराखेका छौं ।[2]

[1]अर्थात् अल्लाहद्वारा वनाइएको भाग्य तथा निर्णयमा यो कुरा स्थित छ कि केही मानिसहरु स्वर्ग तथा केही नरकका अधिकारी हुनेछन् तथा स्वर्ग एवं नरकलाई जिन्न तथा मानिसहरुबाट भरिदिइनेछ, जस्तो कि हदीस (रसूलको कथन) मा छ, नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

"स्वर्ग तथा नरकले परस्पर विवाद गरे, स्वर्गले भन्यो कि के कारण छ कि ममा निर्वल तथा समाजका नीच, पतित मानिसहरु हुनेछन्, नरकले भन्यो कि ममा ठूला-ठूला अत्याचारी तथा अहंकारी मानिसहरु हुनेछन् । अल्लाहले स्वर्गसित भन्यो कि तिमी मेरो दयाको सूचक हौ तिमीद्वारा म जसमाथि चाहन्छु आफ्नो दया गर्छु तथा नरकसित अल्लाहले भन्यो, तिमी मेरो यातनाको द्योतक हौ, तिमीद्वारा म जसलाई चाहन्छु यातना दिन्छु । अल्लाह स्वर्ग तथा नरक दुवैलाई भरिदिनेछ, स्वर्गमा नित्य उसको दया हुनेछ यहाँसम्मकि त्यसले त्यस्तो सृष्टि उत्पन्न गर्नेछ, जो स्वर्गको शेष क्षेत्रमा निवास गर्नेछ तथा नरक, नरकवासीहरुको अधिकताको उपरान्त पनि ( هل من مزيد ) (के अरु पनि छन्) पुकारी रहनेछ, यहाँसम्मकि अल्लाहले आफ्नो खुट्टा राखिदिनेछ, जसमा नरक पुकार्नेछ ( «قط قط، وعزّتك!» ) भयो, भयो तिम्रो मर्यादा तथा प्रतापको शपथ (सहीह बुख़ारी किताबुल तौहीद, बाबो माजाअ फ़ी कौलिही तआला ( إن رحمة الله قريب من المحسنين ) तथा तफ़सीर सूरः क़ाफ-मुस्लिम किताबुल जन्नते, बाबुन्नार यदखुलुहल जब्बारुन वल्जन्नते यदखुलुह ज्जोअफ़ा) ।

[2]अर्थात् शीघ्र नै तिमीलाई थाहा भइहाल्नेछ कि सफलता कसको भाग्यमा आउँछ तथा यो पनि ज्ञात भइहाल्नेछ कि अत्याचारी मानिसहरु सफल छैनन् । अतः यो वचन शीघ्र नै पूर्ण भयो तथा अल्लाह तआलाले मुसलमानहरुलाई विजयी

وَلِلّٰهِ غَيْبُ السَّمٰوٰتِ وَالْاَرْضِ وَاِلَيْهِ يُرْجَعُ الْاَمْرُ كُلُّهٗ فَاعْبُدْهُ وَتَوَكَّلْ عَلَيْهِ ؕ وَمَا رَبُّكَ بِغَافِلٍ عَمَّا تَعْمَلُوْنَ ﴿١٢٣﴾

(१२३) तथा आकाशहरू एवं धर्तीको परोक्ष ज्ञान अल्लाह तआ़लालाई नै छ, तथा हरेक मामिला उसैतिर फर्कन्छ । अर्थात् तिमीले उसैको पूजा गर्नुपर्छ तथा उसैमाथि भरोसा गर्नु पर्दछ एवं तिमीले जे-जति गर्दछौ, त्यसबाट अल्लाह (तआ़ला) अनभिज्ञ छैन ।

## सूरतु यूसुफ़-१२

سُوْرَةُ يُوْسُفَ

सूरः यूसुफ़ मक्कामा उत्रेको तथा यसमा एक सय एघारह आयत एवं बारह रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट शुरू गर्दछु जो अत्यन्त कृपालु एवं अत्यन्त दयालु छ ।

الٓرٰ ۚ تِلْكَ اٰيٰتُ الْكِتٰبِ الْمُبِيْنِ ﴿١﴾

(१) अलिफ. लाम. रा. यो दिव्य प्रकाश भएका पुस्तकका आयतहरू हुन् ।

اِنَّاۤ اَنْزَلْنٰهُ قُرْءٰنًا عَرَبِيًّا لَّعَلَّكُمْ تَعْقِلُوْنَ ﴿٢﴾

(२) निःसन्देह हामीले यसलाई अरबी कुर्आन अवतरित गरेका छौं ताकि तिमी बुझ्न सक ।[1]

भयो तथा अल्लाह तआ़लाले मुसलमानहरूलाई विजयी गऱ्यो तथा सम्पूर्ण अरब महाद्वीप इस्लामको अधीनमा भयो ।

[1]आकाशीय किताबहरूलाई अवतरित गर्नुको उद्देश्य मानिसहरूलाई मार्गदर्शन एवं निर्देशन दिनु हो तथा यो लक्ष्य त्यतिखेर मात्र प्राप्त हुनसक्दछ, जब त्यो क़िताब त्यस भाषामा हुन्छ, जसलाई उनीहरू बुझ्न सक्छन्, अतः सबै आकाशीय किताबहरू त्यस सुमदायको आफ्नो भाषामा उतारिए, जुन समुदायको मार्गदर्शनका लागि अवतरित गरिएका थिए । कुर्आन करीमका प्रथम सम्बोधित मानिसहरू अरबवासी थिए, यसकारण कुर्आन पनि अरबी भाषामा अवतरित गरियो । यसको अतिरिक्त अरबी भाषा आफ्नो व्याख्या, प्रभाव तथा शब्दार्थहरूको वर्णनको आधारमा संसारका अन्य भाषाहरूभन्दा श्रेष्ठ भाषा हो । यसैकारण अल्लाह तआ़लाले यस श्रेष्ठ पुस्तक (कुर्आन मजीद) लाई श्रेष्ठ भाषा (अरबी) मा श्रेष्ठ रसूल (परम आदरणीय) महम्मद सल्लल्लाहु अलैहि वसल्लममाथि श्रेष्ठ फरिश्ता जिब्रीलद्वारा अवतरित गऱ्यो तथा मक्का नगर जहाँ यसको आरम्भ भयो संसारका श्रेष्ठतम् नगरहरूमा श्रेष्ठ नगर हो तथा जुन महिनामा यसको अवतरण शुभारम्भ भयो, त्यो पनि श्रेष्ठ महिना रमज़ानको हो ।

(३) हामीले तपाईं समक्ष सर्वश्रेष्ठ वर्णन[१] प्रस्तुत गर्दछौं, यसकारण कि हामीले तपाईंतिर यो कुर्आन वह्यी (प्रकाशना) द्वारा अवतरित गरेका छौं । तथा निश्चय यसभन्दा पूर्व तपाईं अन्जानहरूमध्ये हुनुहुन्थ्यो ।[२]

نَحْنُ نَقُصُّ عَلَيْكَ أَحْسَنَ الْقَصَصِ بِمَا أَوْحَيْنَا إِلَيْكَ هَٰذَا الْقُرْآنَ وَإِن كُنتَ مِن قَبْلِهِ لَمِنَ الْغَافِلِينَ ③

(४) जबकि यूसुफ[३] ले आफ्नो पितासित भने कि पिताजी मैले एघारह ताराहरू तथा सूर्य-

إِذْ قَالَ يُوسُفُ لِأَبِيهِ يَا أَبَتِ إِنِّي رَأَيْتُ أَحَدَ عَشَرَ كَوْكَبًا وَالشَّمْسَ



[१](قَصَصٌ) यो धातु हो । अर्थ हो कुनै वस्तुको अनुगमन, अभिप्राय एक रमणीय घटना हो । (قِصَّةٌ) मात्र कहानी अथवा कल्पित कथालाई भनिदैन, बरू पूर्वमा व्यतीत घटनाको वर्णनलाई (अर्थात् त्यसको पछ्याडी लाग्नलाई) किस्सा भनिन्छ । यो विगत समाचारहरूको सत्य तथा वास्तविक वर्णन हो । तथा त्यस घटनामा ईर्ष्या-द्वेषको परिणाम, अल्लाहको सहायताको चमत्कार, अहंवादको चंचलता तथा दूराचारको परिणाम तथा अन्य मानवीय स्थिति एवं घटनाहरूका मनोरम वर्णन तथा वडो शिक्षाप्रद पक्ष हुन्, यसकारण कुर्आनले यसलाई श्रेष्ठतम् सर्वोत्तम कथा भनेको छ ।

[२]कुर्आन करीमका यी शब्दहरूबाट पनि स्पष्ट हुन्छ कि नबी करीम सल्लल्लाहु अलैहि वसल्लमलाई परोक्षको ज्ञान थिएन, अन्यथा अल्लाह तआलाले उहाँलाई अन्जान भन्दैनथ्यो । दोस्रो कुरो यो विदित भयो कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम अल्लाहका साँचो नबी हुन् किनभने उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि वह्यी (प्रकाशना) द्वारा नै यस सत्य कथाको वर्णन गरिएको छ । उहाँ सल्लल्लाहु अलैहि वसल्लम न कसैका शिष्य थिए, कि कुनै गुरूबाट सिकेर वर्णन गर्दथे तथा न कुनै अन्यसित नै यस्तो सम्बन्ध थियो कि जसलाई सुनेर इतिहासको यो घटना त्यस विशेष खण्डहरूका साथ उहाँ सल्लल्लाहु अलैहि वसल्लमले प्रसारित गर्दथे । यो निःसन्देह अल्लाह तआलाले नै वह्यी (प्रकाशना) द्वारा उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि अवतरित गरेको छ, जस्तो कि यस स्थानमा स्पष्ट गरिएको छ ।

[३]अर्थात् हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) आफ्नो समुदाय समक्ष यूसुफको कथाको वर्णन गर, जव उसले आफ्नो पितासित भन्यो । पिता आदरणीय याकूब थिए, जस्तो कि अन्य स्थानमा वर्णन छ तथा हदीसमा पनि यस वंशावलीको उल्लेख गरेको छ, अलकरीम इब्नुल करीम इब्नुल करीम इब्नुल करीम यूसुफ बिन (पुत्र) याकूब बिन (पुत्र) इसहाक बिन इब्राहीम (मुसनद अहमद भाग २, पृष्ठ ९६)

وَالْقَمَرَ رَاَيْتُهُمْ لِيْ سٰجِدِيْنَ ④

चन्द्रमालाई[1] देखें कि यिनीहरू सबैले दण्डवत् गरिराखेका छन् ।

قَالَ يٰبُنَيَّ لَا تَقْصُصْ رُءْيَاكَ عَلٰٓى اِخْوَتِكَ فَيَكِيْدُوْا لَكَ كَيْدًا ۭ اِنَّ الشَّيْطٰنَ لِلْاِنْسَانِ عَدُوٌّ مُّبِيْنٌ ⑤

(५) (याकूब अलैहिस्सलामले) भने कि हे मेरा प्यारा पुत्र ! आफ्नो यस स्वप्नको चर्चा आफ्ना दाजूहरूसित नगर्नु । यस्तो नहोस् कि उनीहरूले तिमीसित केही छल कपट गरून् ।[2] शैतान त मनुष्यको खुल्लारुपमा शत्रु हो ।[3]

وَكَذٰلِكَ يَجْتَبِيْكَ رَبُّكَ وَيُعَلِّمُكَ مِنْ تَاْوِيْلِ الْاَحَادِيْثِ وَيُتِمُّ نِعْمَتَهٗ عَلَيْكَ

(६) तथा यसैप्रकार[4] तिम्रो प्रभुले तिमीलाई निर्वाचित गर्नेछ तथा मलाई मामला कुरा बुझ्ने (अर्थात् स्वप्नफल भन्नु) को पनि शिक्षा दिनेछ तथा

[1]केही व्याख्याकारहरूले भनेका छन् कि यी एघार ताराहरूसित तात्पर्य आदरणीय यूसुफका दाजु-भाई हुन्, जो एघार नै थिए तथा चन्द्रमा तथा सूर्यसित माता-पिता हुन् तथा स्वप्नफल चालीस वर्ष पश्चात त्यस समय सामु आयो जब यी सबै दाजु-भाई आफ्ना माता-पिताका साथ मिस्र गए तथा त्यहाँ आदरणीय यूसुफको अगाडी नत्मस्तक भए । जस्तो कि यसको विवरण सूर:को अन्तमा आउनेछ ।

[2]आदरणीय याकूबले सपनाबाट यो अनुमान लगायो कि उनको यो पुत्र मर्यादित पुरुष हुनेछ, यसकारण उनीहरुलाई डर भयो कि यस प्रतिष्ठाको अनुमान लगाएर त्यसको अन्य भाई त्यसलाई कुनै हानि नपुऱ्याओस्, यसकारण उनीहरुले यस सपनाको वर्णन गर्नबाट रोकिदिए ।

[3]यी दाजुहरूको छलकपटका कारणको चर्चा गरियो कि शैतान मनुष्यको आदिदेखि नै शत्रु हो । यसकारण त्यसले मनुष्यहरूलाई अल्मल्याउन, बहकाउन तथा उनीहरूलाई ईर्ष्या तथा द्वेषमा लीन हरेक समय प्रेरित रहन तथा घातमा बसिरहन्छ । अत: यो शैतानको लागि सुअवसर थियो कि आदरणीय यूसुफका विरूद्ध दाजुहरूका हृदयमा द्वेष तथा ईर्ष्याको आगो प्रज्वलित गरिदेओस् । जस्तो कि वास्तवमा त्यसले पछि यस्तै गऱ्यो तथा आदरणीय याकूबको अनुमान सत्य सिद्ध भयो ।

[4]अर्थात् जुन प्रकार तिम्रो प्रभुले सर्वश्रेष्ठ स्वप्न देखाउनको लागि रोज्यो, त्यसैप्रकार तिम्रो प्रभुले तिमीलाई सम्मान पनि प्रदान गर्नेछ तथा स्वप्नहरूको फलबारे सिकाउने छ । (تأويل الأحاديث) को मूल अर्थ कुराहरूको गहिराईसम्म पुग्नु हो । यहाँ यसबाट तात्पर्य स्वप्न फल हो ।

وَعَلَىٰٓ اٰلِ يَعۡقُوۡبَ كَمَآ اَتَمَّهَا عَلٰٓى اَبَوَيۡكَ مِنۡ قَبۡلُ اِبۡرٰهِيۡمَ وَاِسۡحٰقَ ؕ اِنَّ رَبَّكَ عَلِيۡمٌ حَكِيۡمٌ ۝٦

आफ्नो अनुकम्पा तिमीलाई पूर्णरूपमा प्रदान गर्नेछ,[1] तथा याकूबको परिवारलाई पनि[2] जस्तो कि उसले यसभन्दा अघि तिम्रा दुई पूर्वजहरूलाई अर्थात् इब्राहीम तथा इसहाकलाई पनि पूर्णरूपले कृपा प्रदान गऱ्यो, निःसन्देह तिम्रो प्रभु सर्वज्ञ, तत्वदर्शी छ ।

لَقَدۡ كَانَ فِىۡ يُوۡسُفَ وَاِخۡوَتِهٖۤ اٰيٰتٌ لِّلسَّآئِلِيۡنَ ۝٧

(७) निःसन्देह यूसुफ तथा त्यसका दाज्यूहरूबार प्रश्न गर्नेहरूका लागि ठूला निशानीहरू छन् ।[3]

اِذۡ قَالُوۡا لَيُوۡسُفُ وَاَخُوۡهُ اَحَبُّ اِلٰٓى اَبِيۡنَا مِنَّا وَنَحۡنُ عُصۡبَةٌ ؕ اِنَّ اَبَانَا لَفِىۡ ضَلٰلٍ مُّبِيۡنِۚ ۝٨

(८) जबकि उनीहरूले भने कि यूसुफ तथा त्यसको भाई[4] हाम्रो पितालाई हामीभन्दा अत्याधिक प्रिय छन् यद्यपि हामीहरू शक्तिशाली पक्ष हौं,[5] कुनै सन्देह छैन कि हाम्रो पिता स्पष्ट गल्तीमा छन् ।[6]

---

[1]यसवाट तात्पर्य नवूअत हो, जुन आदरणीय यूसुफ अलैहिस्सलामलाई प्रदान गरियो, अथवा ती पुरस्कार हुन् जसका यूसुफ अलैहिस्सलाम मिश्रमा अधिकारी वने ।

[2]यसवाट तात्पर्य आदरणीय यूसुफका दाज्यूहरू, उनका सन्तान आदि हुन्, जो पछि अल्लाहका पुरस्कारका अधिकारी वने ।

[3]अर्थात् यस घटनामा अल्लाह तआलाको विशाल सामर्थ्य तथा नबी करीम सल्लल्लाहु अलैहि वसल्लमको नवूअतको सत्यताका ठूला निशानीहरू छन् । केही व्याख्याकारहरूले यहाँ ती दाज्यूहरूका नाम तथा विवरण पनि भनेका छन् ।

[4]"त्यसको भाई" वाट तात्पर्य विनयामीन हो ।

[5]अर्थात् हामी दसजना दाजु-भाई शक्तिशाली पक्ष तथा बहुसंख्यक छौं, जबकि यूसुफ तथा विनयामीन (जसकी माता अथवा माताहरू अलग्ग थिए) मात्र दुई छन्, यसको पश्चात पनि पिताका आँखाका तारा एवं हृदयका शान्ति छन् ।

[6]यहाँ (ضلال) वाट तात्पर्य त्यो त्रुटि हो, जुन उनीहरूको विचारमा पिताको यूसुफ तथा बिनयामीनसित अत्याधिक प्रेम थियो ।

اُقْتُلُوْا يُوْسُفَ اَوِاطْرَحُوْهُ اَرْضًا يَّخْلُ لَكُمْ وَجْهُ اَبِيْكُمْ وَتَكُوْنُوْا مِنْۢ بَعْدِهٖ قَوْمًا صٰلِحِيْنَ ۝

(९) यूसुफको हत्या गरिदेउ अथवा त्यसलाई (अज्ञात) ठाउँमा पुऱ्याइदेउ ताकि तिम्रो पिताको ध्यान तिमीहरूतिर नै होस्। त्यस पश्चात तिमी असल भइहाल्नू ।[1]

قَالَ قَآئِلٌ مِّنْهُمْ لَا تَقْتُلُوْا يُوْسُفَ وَاَلْقُوْهُ فِيْ غَيٰبَتِ الْجُبِّ يَلْتَقِطْهُ بَعْضُ السَّيَّارَةِ اِنْ كُنْتُمْ فٰعِلِيْنَ ۝

(१०) उनीहरूमध्ये एउटाले भन्यो कि यूसुफको हत्या नगर, बरू कुनै अज्ञात इनार (कुवाँ) को पिंधमा हालेर आउ[2] ताकि उसलाई कुनै यात्रीहरूको समूहले टिपेर लगोस्, यदि तिमीहरूले गर्नु नै छ भने यसप्रकार गर ।[3]

قَالُوْا يٰٓاَبَانَا مَالَكَ لَا تَاْمَنَّا عَلٰى يُوْسُفَ وَاِنَّا لَهٗ لَنٰصِحُوْنَ ۝

(११) (उनीहरूले) भने कि हे पिता ! अन्ततः तपाईं यूसुफको विषयमा हामीमाथि विश्वास किन गर्नुहुन्न, हामी त त्यसका शुभ-चिन्तक हौं ।[4]

---

[1]यसबाट तात्पर्य क्षमा-याचना हो अर्थात इनारमा हालेर अथवा हत्या गरेर अल्लाहसित त्यस पापको क्षमा माँगिहाल्ने छौं ।

[2](جُبٌّ) इनारलाई तथा (غَيَابَةٌ) त्यसको पिंध तथा गहिराईलाई भन्दछन् । इनार त्यसै पनि गहिरो नै हुन्छ तथा त्यसमा खसेको कुरो कसैलाई देखिन्न । जब त्यसको साथ इनारको गहिराई को पनि वर्णन गऱ्यो त मानौं कि अतिश्योक्तिको प्रदर्शन गऱ्यो ।

[3]अर्थात् आवत-जावत गर्ने नवआगन्तुक यात्री जब पानीको खोजीमा इनारको निकट आउने छन् त सम्भव छ कि कसैको ज्ञानमा यो कुरो आओस् कि इनार मा कोही मनुष्य खसेको छ तथा त्यसले उसलाई निकालेर आफ्नो साथमा लैजाओस् । यो विचार एउटा भाईले प्रेम भावनाबाट प्रस्तुत गऱ्यो । हत्याको तुलनामा यो प्रस्ताव वास्तवमा प्रेम भावनाको पक्ष हो । दाजुहरूको ईर्ष्या तथा द्वेषको आगो यति तीव्र थियो कि उसले यो प्रस्ताव तर्सदै प्रस्तुत गऱ्यो कि यदि तिमीहरूले केही गर्नु नै छ भने यो काम यसप्रकार गर ।

[4]यसबाट ज्ञात हुन्छ कि यसभन्दा पहिला पनि यूसुफका दाजुहरूले यूसुफलाई लग्न प्रयत्न गरेका होलान् तथा पिताले अस्वीकार गरिदिए होलान् ।

(१२) भोलि तपाईं त्यसलाई अवश्य हामीहरूका साथमा पठाइदिनुस् ताकि खूब खाओस्-पिओस् तथा खेलोस्[1] त्यसको सुरक्षाका हामी उत्तरदायी छौं ।

أَرْسِلْهُ مَعَنَا غَدًا يَرْتَعْ وَيَلْعَبْ وَإِنَّا لَهُ لَحَٰفِظُونَ ﴿١٢﴾

(१३) (याकूबले) भने कि त्यसलाई तिमीहरूले लग्नु मेरो निम्ति अति दुखद हुनेछ, मलाई यो पनि भय रहनेछ कि तिम्रो असावधानीले त्यसलाई ब्वाँसोले न खाइदेओस् ।

قَالَ إِنِّي لَيَحْزُنُنِيٓ أَن تَذْهَبُوا۟ بِهِۦ وَأَخَافُ أَن يَأْكُلَهُ ٱلذِّئْبُ وَأَنتُمْ عَنْهُ غَٰفِلُونَ ﴿١٣﴾

(१४) उनीहरूले उत्तर दिए कि हामीजस्ता ठूलो शक्तिशाली समूहको उपस्थितिमा पनि यदि उसलाई ब्वाँसोले खायो भने हामी त निकम्मा नै भयौं ।[2]

قَالُوا۟ لَئِنْ أَكَلَهُ ٱلذِّئْبُ وَنَحْنُ عُصْبَةٌ إِنَّآ إِذًا لَّخَٰسِرُونَ ﴿١٤﴾

(१५) अनि जब उसलाई लिएर हिंडे तथा सबैले मिलेर निश्चय गरे कि उसलाई एकान्त गहिरो इनारको पिंधमा फ्यांकिदेऊन्, त हामीले यूसुफतिर वह्यी (प्रकाशना) गऱ्यौं कि नि:सन्देह (समय आइराखेको छ) जबकि तिमी उनीहरूलाई यस कुरोको सूचना त्यस अवस्थामा दिनेछौं कि उनीहरूलाई थाहा नै नहोस् ।[3]

فَلَمَّا ذَهَبُوا۟ بِهِۦ وَأَجْمَعُوٓا۟ أَن يَجْعَلُوهُ فِى غَيَٰبَتِ ٱلْجُبِّ ۚ وَأَوْحَيْنَآ إِلَيْهِ لَتُنَبِّئَنَّهُم بِأَمْرِهِمْ هَٰذَا وَهُمْ لَا يَشْعُرُونَ ﴿١٥﴾

[1]खेलकूदतिर आकर्षण, मनुष्यको प्रकृतिमा सम्मिलित छ। यसैले उचित खेलकूदमाथि अल्लाह तआलाले कुनै युगमा पनि प्रतिबन्ध लगाएन । इस्लाममा पनि यिनको आज्ञा छ तर प्रतिबन्धित अर्थात् यस्ता खेलकूदको आज्ञा छ जुन उचित छन्, जुन धार्मिक नियमहरूद्वारा निषेध नहोस् अथवा निषेधितसम्म पुग्ने साधन नबनून् । अत: आदरणीय याकूबले पनि खेलकूदको सीमासम्म मनाही गरेनन् । तर यो शंका व्यक्त गरे कि तिमीहरू खेलकूदमा लीन हुंदा त्यसलाई ब्वाँसोले न खाइहालोस्, किनभने खुला मैदान तथा मरूभूमिहरूमा ब्वाँसो सामान्यरूपले पाइन्थे ।

[2]यो पितालाई विश्वास गराईंदैछ कि यो कसरी हुनसक्छ कि हामी यति दाजु-भाईहरूका उपस्थितिमा ब्वाँसोले यूसुफलाई खान सकोस् ।

[3]कुरआन करीम अति संक्षेपमा घटनाको वर्णन गर्दैछ। अर्थ यो हो कि जब आफ्नो पूर्व योजनाका अनुसार उनीहरूले यूसुफलाई इनारमा फ्याँकिदिए, त अल्लाह तआलाले

(१६) तथा राति (इशा) को समय (ती सबै) आफ्ना पिताको पासमा रूँदै पुगे ।

وَجَآءُوٓ أَبَاهُمْ عِشَآءً يَبْكُونَ ﴿١٦﴾

(१७) तथा भन्नलागे कि प्रिय पिताजी हामी आपसमा दौड प्रतिस्पर्धामा लाग्यौं तथा यूसुफलाई सर-सामानको पासमा छाडिदियौं अनि ब्वाँसोले त्यसलाई खाइहाल्यो, तपाईं त हाम्रो कुरामा विश्वास गर्नुहुन्न यद्यपि हामी पूर्णरूपमा साँचो नै हौं ।[1]

قَالُوا۟ يَٰٓأَبَانَآ إِنَّا ذَهَبْنَا نَسْتَبِقُ وَتَرَكْنَا يُوسُفَ عِندَ مَتَٰعِنَا فَأَكَلَهُ ٱلذِّئْبُ ۖ وَمَآ أَنتَ بِمُؤْمِنٍ لَّنَا وَلَوْ كُنَّا صَٰدِقِينَ ﴿١٧﴾

(१८) तथा यूसुफको कुर्ता (कमीज़) लाई झूठो रगतमा भिजाएर ल्याएका थिए । (पिताले) भनें, होइन बरू तिमीहरूले आफ्ना मनले नै एउटा कुरा रचेका छौ । अब धैर्य नै श्रेष्ठ छ ।[2] तथा

وَجَآءُو عَلَىٰ قَمِيصِهِۦ بِدَمٍ كَذِبٍ ۚ قَالَ بَلْ سَوَّلَتْ لَكُمْ أَنفُسُكُمْ أَمْرًا ۖ فَصَبْرٌ جَمِيلٌ ۖ وَٱللَّهُ ٱلْمُسْتَعَانُ

आदरणीय यूसुफलाई सान्त्वना दियो तथा साहस राख्नको लागि वह्यी (प्रकाशना) गऱ्यौं कि चिन्ताको आवश्यकता छैन, हामीले तिम्रो सुरक्षा मात्र गर्ने छैनौं बरू यस्तो उच्च स्थानमा तिमीलाई आसीन गर्नेछौं कि यी दाज्यूहरू भिक मागने भाँडा तिम्रो समक्ष लिएर आउनेछन् अनि त्यसपछि तिमीले उनीहरूलाई भन्नेछौ कि तिमीहरूले आफ्नो एउटा भाईसँग यसप्रकार निष्ठरता गरेका थियौ जसलाई सुनेर उनीहरू चकित तथा लज्जित हुनेछन् । आदरणीय यूसुफ यद्यपि त्यसबखत बालक थिए, तर जो बालक नबूवतबाट विभूषित हुने हुन्छ, त्यसमाथि बचपनमा नै वह्यी (प्रकाशना) आउँछ, जस्तो आदरणीय ईसा तथा यह्या आदि माथि आयो ।

[1]अर्थात् यदि हामी तपाईंको लागि विश्वस्त तथा सत्यवादी भएपनि तपाईं यूसुफको प्रसँगमा हाम्रो कुरा मान्नु हुन्नथ्यो, अब त त्यसै हाम्रो स्थिति संदिग्ध व्यक्तिको जस्तो छ, अहिले तपाईं कसरी हाम्रो कुरा मान्नुहुनेछ ।

[2]भन्दछन् कि एउटा बाखाको बच्चालाई काटेर त्यसको रगतले यूसुफको कमिजलाई भिजाए तथा यो बिर्से कि यदि ब्वाँसोले यूसुफ़लाई खाएको भए कमिज पनि च्यातिन्थ्यो, कमिज च्यातेकै थिएन, जसलाई देखेर तथा साथै आदरणीय यूसुफको सपना तथा नबूअतको शक्तिबाट अनुमान लगाएर आदरणीय याकूबले भने कि यो घटना यसप्रकार घटित भएको होइन जस्तो तिमीहरूले वर्णन गरिराखेका छौ, बरू यो तिम्रो मनगढन्त कुरा हो । तैपनि जे हुनु थियो भइहालेको थियो, आदरणीय याकूब त्यसको विवरणबाट अन्जान थिए, यसकारण धैर्यबाहेक कुनै उपाय थिएन तथा अल्लाहको सहायताको अतिरिक्त कुनै सहारा थिएन ।

عَلَىٰ مَا تَصِفُونَ ⑱

तिम्रा रचिएका कुराहरूमा अल्लाहसित नै सहायताको प्रार्थना छ ।[1]

وَجَآءَتْ سَيَّارَةٌ فَأَرْسَلُوا۟ وَارِدَهُمْ فَأَدْلَىٰ دَلْوَهُۥ ۖ قَالَ يَٰبُشْرَىٰ هَٰذَا غُلَٰمٌ ۚ وَأَسَرُّوهُ بِضَٰعَةً ۚ وَٱللَّهُ عَلِيمٌۢ بِمَا يَعْمَلُونَ ⑲

(१९) तथा एउटा यात्रुको समूह आयो तथा उनीहरूले आफ्नो पानी ल्याउने मानिसलाई पठाए, उसले आफ्नो डोल (पानी तान्ने भाडो) हाल्ने बित्तिकै भन्नलाग्यो, वाह-वाह ! प्रसन्नताको कुरा छ, यो त एउटा बालक हो ।[2] उनीहरूले त्यसलाई ब्यापारको धन ठानेर लुकाइदिए ।[3] तथा अल्लाह तआला

[1]द्वयवादीहरूले आदरणीय आयेशामाथि जब आक्षेप लगाए त उनीहरूले पनि नबी सल्लल्लाहु अलैहि वसल्लमको प्रश्न तथा कथनको यही उत्तर दिएका थिए ।

وَاللهِ لَا أَجِدُ لِي وَلَا لَكُمْ مَثَلًا إِلَّا أَبَا يُوسُفَ، ﴿فَصَبْرٌ جَمِيلٌ ۖ وَاللهُ الْمُسْتَعَانُ عَلَىٰ مَا تَصِفُونَ﴾

"अल्लाहको सौगन्ध म स्वयं तथा तपाईंहरूका लागि त्यही उदाहरण पाउँछु जुससित यूसुफका पिता याकूबले सामना गर्नुपरेको थियो तथा उनले (فَصَبْرٌ جَمِيلٌ) (धैर्य राख्नु अति उत्तम छ) भनेर धैर्य तथा सहनशीलताको मार्ग अपनाउनु भएको थियो ।" (सहीह बुख़ारी तफ़सीर सूरः यूसुफ) अर्थात् मेरो लागि पनि धैर्य एवं सहनशीलताका अतिरिक्त कुनै बाटो छैन ।

[2](وارد) (वारिद) त्यस व्यक्तिलाई भन्दछन् जो यात्रीहरूको गिरोहका लागि पानी आदिको प्रबन्ध गर्ने उद्देश्यले अगाडी-अगाडी हिंड्छ ताकि उचित स्थान देखेर यात्रीहरूलाई रोक्न सकियोस् । यो वारिद (यात्रुहरूका लागि पानीको प्रबन्ध गर्ने मानिस जब इनारमा पुग्यो त आफ्नो डोल तल झुण्ड्यायो त आदरणीय यूसुफले उसको डोरी समातिहाले । वारिद (जल-प्रवन्धक) ले एउटा सुन्दर बालकलाई देख्यो त माथि तानिहाल्यो तथा अत्यन्त प्रसन्न भयो ।

[3](بِضَاعَة) व्यापारको सामग्रीलाई भन्दछन् (أَسَرُّوهُ) को कर्ता को हो ? अर्थात् आदरणीय यूसुफलाई व्यापार सामग्री ठानेर लुकाउने व्यक्ति को हो ? यसमा मतभेद छ । हाफिज़ इब्ने क़सीरले यूसुफका दाज्यूहरूलाई कर्ता भनेका छन् । यसको अर्थ यो हो कि जब डोलका साथ यूसुफ पनि इनारबाट बाहिर निस्के त त्यहाँ यी दाजुहरू उपस्थित थिए, तैपनि उनीहरूले वास्तविकतालाई लुकाए, यो भनेनन् कि यो हाम्रो भाई हो तथा आदरणीय यूसुफले पनि हत्याको डरले आफू भाई हुने कुरो व्यक्त गरेनन, बरू दाज्यूहरूले उनलाई बिकाउ (बिक्रीको लागि सामग्री)

त्यससित सूचित थियो जुन उनीहरूले गरिराखेका थिए ।[१]

(२०) तथा उनीहरूले[२] उसलाई निकै कम मुल्य केही दिरहममा बेचिदिए, उनीहरू त यूसुफको विषयमा अत्याधिक रूचिहीन थिए ।[३]

وَشَرَوْهُ بِثَمَنٍ بَخْسٍ دَرَاهِمَ مَعْدُوْدَةٍ ۚ وَكَانُوْا فِيْهِ مِنَ الزّٰهِدِيْنَ ۝٢٠

भने त उनी मौन रहे र आफ्नो विक्रय नै राम्रो ठाने । अतः यस जलप्रबन्धकले आफ्नो यात्राका साथीहरूलाई यो शुभ-सूचना सुनाए कि एउटा बालक बिक्रीमा छ । तर यो कुरो घटनाक्रमसित मेल खाँदैन । यिनका विपरीत इमाम शौकानीले (أَسَرُّوْهُ) को कर्ता जलप्रबन्धक तथा त्यसको यात्राका साथीहरूलाई भनेका छन् किनभने उनीहरूले यो प्रकट गरेनन् कि यो बालक इनारवाट निस्केको छ, किनभने सबै यात्रीहरूको भाग 'व्यापारिक सामग्री' मा हुन्थ्यो, वरू यात्रीहरूलाई उनले गएर यो भने कि इनारका मालिकहरूले यो वच्चा उनलाई सुम्पिदिएका छन् ताकि यसलाई उनीहरू मिश्र लगरे बेचिदेऊन् । तर समीपवर्ती कुरा यो हो कि यात्रीहरूले बच्चालाई 'व्यापारिक सामग्री' वनाएर लुकाइहाले कि कहीं उसका निकट सम्बन्धी उसको खोजीमा नआईहालून् तथा यसप्रकार उनीहरू अप्ठ्यारोमा परुन्, किनभने वच्चा हुनु तथा इनारमा पाइनु, यस कुरोको संकेत हो कि त्यो कुनै निकटवर्ती क्षेत्रको वासिन्दा हो तथा खेल्दै उफ्रँदै आइखसेको छ ।

[१]अर्थात् यूसुफसित यो जे-जति भइराखेको थियो । अल्लाह तआलालाई त्यसको ज्ञान थियो तथा अल्लाह तआलाले यो सबै कुरा यसकारण हुन दियो ताकि भाग्यले लेखेको कुरा पूरा होस् । यसको अतिरिक्त यसमा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको लागि संकेत छ । अर्थात् अल्लाह आफ्नो पैग़म्बरलाई बताइराखेको छ कि तपाईंका समुदायका मानिसहरू अवश्य दुख दिइराखेका छन् तथा म त्यसवाट रोक्ने सामर्थ्य पनि राख्दछु, परन्तु म त्यसैप्रकार उनीहरूलाई अवसर दिराखेको छु जसरी यूसुफका दाज्यूहरूलाई अवसर दिएको थिएँ । तथा अन्तमा मैले यूसुफलाई मिश्रको राजसिंहासनमा आसीन गराइदिएँ, तथा त्यसका दाज्यूहरूलाई त्यसको दरबारमा तुच्छ तथा निस्सहाय वनाएर उभ्याइदिएँ । हे पैग़म्बर ! एउटा समय आउनेछ जबकि तपाईं पनि सफल हुनुहुनेछ तथा यी कुरैशका सरदार तपाईंका आँखाका संकेत तथा ओठहरू हल्लिनुको प्रतीक्षामा रहनेछन् । अतः मक्का विजयको अवसरमा यो समय शीघ्र नै आइहाल्यो ।

[२]दाज्यूहरूले अथवा अर्को व्याख्याका अनुसार व्यापारिक यात्राका यात्रीहरूले बेचे ।

[३]किनभने खसेका कुरा मनुष्यलाई विना परिश्रम प्राप्त हुन्छ, यसकारण त्यो चाहे जति बहुमुल्य होस्, त्यसको सही मुल्य तथा आदर-सम्मान मनुष्यलाई प्रकट हुँदैन ।

(२१) मिश्रवासीहरू मध्येबाट जसले त्यसलाई किनेको थियो, त्यसले आफ्नो पत्नीसित भन्यो कि यसलाई आदर तथा सम्मानका साथ राख, धेरै सम्भव छ कि यसले हामीलाई लाभ पुऱ्याओस् अथवा हामीले यसलाई आफ्नो पुत्र नै बनाइहालौं, यसप्रकार हामीले (मिश्रको) धर्तीमा यूसुफका खुट्टा स्थिर गऱ्यौं ।[२] ताकि हामीले त्यसलाई स्वप्नका परिणामका केही ज्ञान सिखाऔं । अल्लाह आफ्ना इच्छाका पूर्तिमा सामर्थ्य राख्दछ, तर अधिकतर मानिसहरू अन्जान हुन्छन् ।

وَقَالَ الَّذِى اشْتَرٰىهُ مِنْ مِّصْرَ لِامْرَاَتِهٖۤ اَكْرِمِىْ مَثْوٰىهُ عَسٰۤى اَنْ يَّنْفَعَنَاۤ اَوْ نَتَّخِذَهٗ وَلَدًا ؕ وَكَذٰلِكَ مَكَّنَّا لِيُوْسُفَ فِى الْاَرْضِ ؗ وَلِنُعَلِّمَهٗ مِنْ تَاْوِيْلِ الْاَحَادِيْثِ ؕ وَاللّٰهُ غَالِبٌ عَلٰۤى اَمْرِهٖ وَلٰـكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٢١﴾

(२२) तथा जब (यूसुफ) ले पूर्ण यौवन प्राप्त गऱ्यो, हामीले त्यसलाई निर्णयको शक्ति तथा ज्ञान दियौं ।[३] हामीले भलाई गर्नेहरूलाई यसैप्रकार प्रतिफल दिन्छौं ।

وَلَمَّا بَلَغَ اَشُدَّهٗۤ اٰتَيْنٰهُ حُكْمًا وَّعِلْمًا ؕ وَكَذٰلِكَ نَجْزِى الْمُحْسِنِيْنَ ﴿٢٢﴾

(२३) तथा त्यस स्त्रीले जसको घरमा यूसुफ थिए, यूसुफलाई काम भावनाले फकाउन प्रारम्भ गऱ्यो तथा ढोकाहरू बन्द गरेर भन्नथालि, आउ, । (यूसुफले) भने, अल्लाहले बचाओस् ! त्यो मेरो प्रभु हो, मलाई

وَرَاوَدَتْهُ الَّتِىْ هُوَ فِىْ بَيْتِهَا عَنْ نَّـفْسِهٖ وَغَلَّقَتِ الْاَبْوَابَ وَقَالَتْ هَيْتَ لَكَ ؕ قَالَ مَعَاذَ اللّٰهِ اِنَّهٗ رَبِّىْۤ اَحْسَنَ مَثْوَاىَ ؕ اِنَّهٗ لَا يُفْلِحُ الظّٰلِمُوْنَ ﴿٢٣﴾

[१]भनिन्छ कि त्यस समय मिश्रको राज-सिंहासनमा रय्यान बिन वलीद आसीन थियो, तथा यो अज़ीज जसले यूसुफलाई किनेको थियो, त्यसको वित्त मन्त्री थियो, त्यसकी पत्नीको नाम केही ज्ञाताहरूले राईल तथा केहीले जुलेखा भनेका छन् । والله أعلم

[२]अर्थात् जसरी हामीले यूसुफलाई इनार तथा अत्याचारी दाज्यूहरूबाट मुक्ति दियौं, त्यसरी नै यूसुफलाई हामीले मिश्रको धर्तीमा एउटा उचित स्थान प्रदान गऱ्यौं ।

[३]अर्थात् नबूअत अथवा नबूअतभन्दा पूर्वको बुद्धिमानी तथा निर्णयको शक्ति ।

उसले अति उत्तम प्रकारले राखेको छ । अन्याय गर्नेहरूको भलो हुँदैन ।[1]

(२४) तथा त्यस स्त्रीले यूसुफको इच्छा गऱ्यो तथा यूसुफले त्यसको इच्छा गर्दथे,[2] यदि उनले आफ्नो प्रभुको प्रतीक नदेखेको भए ।[3] यस्तै भयो, यसकारण कि हामीले त्यसबाट नराम्रो कुरा तथा

وَلَقَدۡ هَمَّتۡ بِهِۦۖ وَهَمَّ بِهَا لَوۡلَآ أَن رَّءَا بُرۡهَٰنَ رَبِّهِۦۚ كَذَٰلِكَ لِنَصۡرِفَ عَنۡهُ ٱلسُّوٓءَ وَٱلۡفَحۡشَآءَۚ

[1]यहाँबाट यूसुफको एउटा नयाँ परीक्षा प्रारम्भ भयो । मिस्री अज़ीज़की पत्नी, जसलाई त्यसको पतिले विशेषरूपले भनेको थियो कि यूसुफलाई आदर सम्मानका साथ राखोस्, त्यो आदरणीय यूसुफको सुन्दरताबाट मोहित भईहाली, तथा उनलाई पापको प्रेरणा दिन लागी, जसलाई आदरणीय यूसुफले लत्याइदिए ।

[2]यो अनुवाद अधिकतर व्याख्याकारहरूको व्याख्या अनुसार छ । तथा जुन मानिसहरूले (لَوۡلَا) सित जोडेर यो अर्थ भनेका छन् कि यूसुफले इच्छा नै गरेनन्, यी व्याख्याकारहरूले त्यसलाई अरबी भाषा शैलीका विरूद्ध भनेका छन् । तथा यो अर्थ लेखेका छन् कि इच्छा त यूसुफले पनि गरिहालेका थिए, परन्तु एक त यो स्वयं थिएन, बरू मिस्री अज़ीजकी पत्नीको प्रलोभन तथा दबाव त्यसमा सम्मिलित थिए । अर्को यो कि पापको इच्छा गर्नु पवित्रताको विरूद्ध होइन बरू त्यस अनुसार कर्म गर्नु पवित्रताको विरूद्ध हो (फ़तहुल क़दीर र इब्ने कसीर) तर शोधकर्ता व्याख्याकारहरूले यो अर्थ वर्णित गरेका छन् कि यूसुफले पनि त्यसको इच्छा गरिहाल्थे यदि आफ्नो प्रभुको निशानी नदेखेको भए । अर्थात् उनले आफ्नो प्रभुको निशानी देखिसकेका थिए यसकारण मिस्री अज़ीज़की पत्नीको इच्छा नै गरेनन् । बरू पापको प्रेरणा पाउनासाथ पुकारिहाले (مَعَاذَ ٱللَّهِ) परन्तु इच्छा नगर्नुको यो अर्थ होइन कि मनमा उत्तेजना नै उत्पन्न भएन । उत्तेजना उत्पन्न हुनु अर्कै कुरा हो तथा इच्छा गर्नु अलग्गै कुरा हो । तथा वास्तविक कुरो यो हो कि यदि कसैसित काम उत्तेजना नै उत्पन्न हुन्न त यस्ता व्यक्तिलाई पापबाट बच्नु कुनै ठूलो कुरो होइन । ठूलो त तब छ कि जब मनमा काम उत्तेजना उत्पन्न हुन्छ तथा त्यसपछि मनुष्य त्यसमाथि नियन्त्रण गर्दछ तथा पापबाट रोकिन्छ । आदरणीय यूसुफले यसै चरम सीमामा धैर्य तथा नियन्त्रणको अनुपम नमूना प्रस्तुत गरे ।

[3]यहाँ प्रथम व्याख्याको आधारमा (لَوۡلَا) को उत्तर दिइएको छैन । (لَفَعَلَ مَا هَمَّ بِهِ) लुप्त छ अर्थात् यदि यूसुफले प्रभुको निशानी नदेखेको भए त जुन इच्छा गरेका थिए, गरिहाल्थे । यो प्रतीक के थियो ? यसमा विभिन्न कथन छन् । अर्थ यो हो कि प्रभुको तर्फबाट कुनै यस्तो वस्तु उहाँलाई देखाइयो कि त्यसलाई देखेर उहाँ मनोकामनालाई दबाउन तथा राक्नमा सफल भए । अल्लाह तआलाले आफ्ना पैग़म्बरहरूको यसैप्रकार सुरक्षा गर्दछ ।

निर्लज्जतालाई समाप्त गरिदेऔं ।[1] नि:सन्देह त्यो हामीबाट चयन गरिएका भक्तहरू मध्येबाट थियो ।

إِنَّهُۥ مِنْ عِبَادِنَا ٱلْمُخْلَصِينَ ﴿٢٤﴾

(२५) तथा दुबै ढोकातिर दगुरे,[2] त्यस स्त्रीले यूसुफको वस्त्र (कुर्ता) पछाडीबाट तानेर च्यातिदिइ तथा त्यस स्त्रीको पति दुबैलाई ढोकाको नजीक नै भेटियो, त भन्नलागी कि जुन व्यक्ति तिम्रो पत्नीसँग नराम्रो इच्छा गर्दछ बस त्यसको दण्ड त यही नै हो कि त्यसलाई बन्दी बनाइयोस् अथवा अन्य कुनै घोर यातना दिइयोस् ।[3]

وَٱسْتَبَقَا ٱلْبَابَ وَقَدَّتْ قَمِيصَهُۥ مِن دُبُرٍ وَأَلْفَيَا سَيِّدَهَا لَدَا ٱلْبَابِ ۚ قَالَتْ مَا جَزَآءُ مَنْ أَرَادَ بِأَهْلِكَ سُوٓءًا إِلَّآ أَن يُسْجَنَ أَوْ عَذَابٌ أَلِيمٌ ﴿٢٥﴾

(२६) (यूसुफले) भने, यो स्त्रीले नै मलाई फकाएर (मेरो मनोकामनाको सुरक्षाबाट असावधान गर्न) चाहन्थी,[4] तथा स्त्रीको जातिको एउटा व्यक्तिले गवाही (साक्ष्य) दियो[5] कि

قَالَ هِىَ رَٰوَدَتْنِى عَن نَّفْسِى ۚ وَشَهِدَ شَاهِدٌ مِّنْ أَهْلِهَآ إِن كَانَ قَمِيصُهُۥ قُدَّ مِن قُبُلٍ فَصَدَقَتْ وَهُوَ مِنَ ٱلْكَٰذِبِينَ ﴿٢٦﴾

[1]अर्थात् जसरी हामीले यूसुफलाई युक्ति देखाएर, नराम्रोको इच्छाबाट उसलाई बचायौं, त्यसरी हामीले उसलाई हरेक मामिलामा दूराचार तथा निर्लज्जताका कुराहरूबाट टाढा राख्न प्रवन्ध गऱ्यौं, किनभने त्यो हाम्रा चयनित गरिएका भक्तहरूमध्ये थियो ।

[2]जब आदरणीय यूसुफले देखे कि त्यो स्त्री नराम्रो कर्म गर्नका लागि बाध्य गरिराखेकि छे, त उनी बाहिर निस्कनको लागि ढोकातिर भागे, यूसुफलाई समात्नको निम्ति स्त्री उनको पछाडी दगुरी, यसप्रकार दुबै ढोकातिर लम्के तथा दगुरे ।

[3]अर्थात् पतिलाई देख्नासाथै स्वयं निर्दोष बनिहाली तथा सारा दोष यूसुफमाथि लगाइदिन्छे तथा अपराधी बनाएर उनको लागि दण्ड पनि निर्धारित गरिदिइ । यद्यपि वास्तविकता यसको विपरीत थियो, अपराधीनी स्वयं थिई जबकि आदरणीय यूसुफ निर्दोष थिए तथा यस नराम्रो कुराबाट बाँच्नको इच्छुक तथा यसबाट पन्छिनका लागि प्रयत्नशील रहने गर्दथे ।

[4]आदरणीय यूसुफले जब यो देखे कि यो स्त्री सारा दोष उनैमाथि आरोपित गरिराखेकि छे त वास्तविकता स्पष्ट गरिदिए तथा भनिदिए कि मलाई नराम्रोको लागि बाध्य त यसैले नै गर्दैआइराखेकी छ । म त यसबाट पन्छिन बाहिर ढोकातिर भाग्दै आएको हूँ ।

[5]यो उनैको परिवारको कोही बुद्धिमान व्यक्ति थियो जसले यो निर्णय दियो । निर्णयलाई यहाँ साक्ष्यको शब्दबाट वर्णन गरिएको छ, किनभने समस्या अझै जानकारी प्राप्त गर्नुको लागि थियो । नवजात शिशुको साक्ष्य भएको कुरा प्रमाणित कथनहरूबाट सिद्ध छैन । सहीहैनका

यदि त्यसको कमीज अगाडीबाट च्यातिएको छ भने स्त्री साँचो छे तथा यूसुफ असत्य बोल्नेहरूमध्ये हो ।

وَإِنْ كَانَ قَمِيصُهُ قُدَّ مِنْ دُبُرٍ فَكَذَبَتْ وَهُوَ مِنَ الصَّادِقِينَ ﴿٢٧﴾

(२७) यदि त्यसको कमीज पछाडीबाट च्यातिएको छ भने स्त्री झूटो छे तथा यूसुफ सत्यवादी मध्येबाट छ ।

فَلَمَّا رَأَى قَمِيصَهُ قُدَّ مِنْ دُبُرٍ قَالَ إِنَّهُ مِنْ كَيْدِكُنَّ إِنَّ كَيْدَكُنَّ عَظِيمٌ ﴿٢٨﴾

(२८) पतिले देख्यो कि कुर्ता पछाडीबाट च्यातिएको छ त स्पष्टरूपले यो भनिदियो कि यो त तिमी स्त्रीहरूको जाल हो, निःसन्देह तिम्रो हतकण्डा ठूलो हुन्छ ।[1]

يُوسُفُ أَعْرِضْ عَنْ هَٰذَا وَاسْتَغْفِرِي لِذَنْبِكِ إِنَّكِ كُنْتِ مِنَ الْخَاطِئِينَ ﴿٢٩﴾

(२९) यूसुफ, अब यस कुरालाई बिर्सिदेउ,[2] तथा (हे स्त्री) ! आफ्ना पापहरूको लागि क्षमा माँग, निःसन्देह तिमी पापीहरू मध्ये हौ ।[3]

وَقَالَ نِسْوَةٌ فِي الْمَدِينَةِ امْرَأَتُ الْعَزِيزِ تُرَاوِدُ فَتَاهَا عَنْ نَفْسِهِ قَدْ شَغَفَهَا حُبًّا إِنَّا لَنَرَاهَا فِي ضَلَالٍ مُبِينٍ ﴿٣٠﴾

(३०) तथा नगरका स्त्रीहरूमा चर्चा हुनलाग्यो कि अजीजकी पत्नी आफ्नो (युवक) दासलाई आफ्नो स्वार्थ सिद्धिका लागि फकाउनमा लागिरहन्छे, त्यसको हृदयमा यूसुफको प्रेम संचित छ, हाम्रो बुद्धिले त त्यो स्पष्ट गल्तीमा छे ।[4]

हदीस अनुसार तीन नवजात शिशुहरूको कुरा गर्नु प्रमाणित छ, जसमा यो चौथो होइन, जसको वर्णन यस स्थानमा गरिन्छ ।

[1]यो मिस्रका अज़ीज़को कथन हो, जुन उसले आफ्नी पत्नीको कुचरित्रतालाई देखेर स्त्रीहरूको विषयमा भन्यो । यो न अल्लाहको कथन हो तथा न यो प्रत्येक स्त्रीको विषयमा उचित छ । अतः यसलाई प्रत्येक स्त्रीमाथि आरोपण गरेर तथा यस आधारमा स्त्रीलाई छलकपटको मूर्ति भन्नु, कुरआनको कदापि उद्देश्य होइन, जस्तो कि केही मानिसहरू यस वाक्यको आधारमा यस विषयमा विचार व्यक्त गर्दछन् ।

[2]अर्थात् यसको प्रचार नगर ।

[3]यसवाट ज्ञात हुन्छ कि मिस्रका अज़ीज़माथि आदरणीय यूसुफको सत्यता प्रकट भइसकेको थियो ।

[4]जस्तो कि सुगन्धलाई वन्द गरेर लुकाउन सकिंदैन, प्रेम प्रसँग पनि यस्तै नै छ, यद्यपि अज़ीज़ले आदरणीय यूसुफसित यसलाई बिर्सिदिनको लागि भन्यो ।

فَلَمَّا سَمِعَتْ بِمَكْرِهِنَّ أَرْسَلَتْ إِلَيْهِنَّ وَأَعْتَدَتْ لَهُنَّ مُتَّكَأً وَآتَتْ كُلَّ وَاحِدَةٍ مِّنْهُنَّ سِكِّينًا وَقَالَتِ اخْرُجْ عَلَيْهِنَّ ۖ فَلَمَّا رَأَيْنَهُ أَكْبَرْنَهُ وَقَطَّعْنَ أَيْدِيَهُنَّ وَقُلْنَ حَاشَ لِلَّهِ مَا هَٰذَا بَشَرًا إِنْ هَٰذَا إِلَّا مَلَكٌ كَرِيمٌ ﴿٣١﴾

(३१) त्यसले (अजीज़की पत्नीले) जब उनीहरूका छलपूर्ण कुरा सुनी त उनीहरूलाई आमन्त्रित गरी,[1] तथा उनीहरूका लागि एउटा सभाको आयोजना गरी,[2] तथा उनीहरूमा प्रत्येकलाई एउटा छुरी दिई । तथा भनी कि हे यूसुफ ! यिनीहरूका समक्ष आउ ।[3] ती स्त्रीहरूले जब उसलाई देखे त अति महान ठाने तथा आफ्ना हात काटिहाले,[4] तथा मुखबाट सहसा निस्किहाल्यो: अल्लाहको शरण ! यो मानिस होइन, यो त कुनै महान फरिश्ता हो ।

निःसन्देह तपाईंको मुखबाट त्यसको कहिल्यै वर्णन पनि आएको छैन होला, तैपनि यो घटना जङ्गलको आगो जस्तै नगरमा फैलिहाल्यो तथा मिस्री स्त्रीहरूमा यसको चर्चा सामन्य रूपले हुनथाल्यो, स्त्रीहरू आश्चर्य चकित थिए कि यदि प्रेम गर्नु थियो कुनै सुन्दर आकर्षक पुरूषसित गर्थ्यो, यो त के कुरा भयो कि आफ्नै दासमाथि मरिमेटि यो त त्यसको निकै ठूलो मूर्खता हो ।

[1]मिस्री स्त्रीहरूका छलपूर्ण कुराहरू तथा व्यङ्ग्य एवं कटाक्षलाई छल भनिएको छ, जसको कारण केही व्याख्याकारहरूले यो वर्णन गरेका छन् कि ती स्त्रीहरूलाई पनि यूसुफको सुन्दरताको विषयमा सूचनाहरू पाइराखेका थिए । अतः साक्षात सुन्दरतालाई हेर्न चाहन्थे । अतः उनीहरू आफ्नो छल (षड्यन्त्र) मा सफल भए । अज़ीज़की पत्नीले यो बताउनलाई कि उसमाथि म मोहित भएकी छु, त्यो एउटा दास अथवा जनसामान्य होइन, बरू त्यसलाई देखेर मोहित हुनु कुनै अनौठो कुरा होइन, ती स्त्रीहरूका लागि भोजको प्रबन्ध गरी तथा उनीहरूलाई भोजको निमन्त्रणा पठाए ।

[2]अर्थात् उनीहरूका लागि यस्तो आसनको प्रबन्ध गऱ्यो जहाँ तकिया राखिएका थिए, जस्तो कि आजकल पनि अरबहरूमा यस्तो आसन सामान्य रूपले पाईन्छ यहाँसम्मकी होटल तथा भोजनालयहरूमा पनि यसको प्रबन्ध छ ।

[3]अर्थात् आदरणीय यूसुफलाई त्यसवेलासम्म लुकाएर राख्यो । जब सबै स्त्रीहरूले हातमा छुरी समातिहाले त अज़ीज़की पत्नी (जुलेख़ा) ले आदरणीय यूसुफलाई सभामा उपस्थित हुन आदेश दियो ।

[4]अर्थात् यूसुफको सौन्दर्य देखेर एक त उनको श्रेष्ठता तथा प्रतिष्ठालाई स्वीकार गरे तथा अर्को उनीमाथि यस्तो मुग्ध भइहाले कि छुरी आफ्ना हातमा चलाइहाले, जसबाट उनका हात काटिएर रक्त रंजित भइहाले । हदीसमा वर्णित छ कि आदरणीय यूसुफलाई आधा सुन्दरता प्रदान गरिएको छ । (सहीह मुस्लिम किताबुल ईमान, बाबुल इसराअ)

यो मानिस कदापि होइन, यो त निःसन्देह कुनै निकै प्रतिष्ठित फरिश्ता हो ।[1]

قَالَتْ فَذَٰلِكُنَّ الَّذِي لُمْتُنَّنِي فِيهِ ۖ وَلَقَدْ رَاوَدتُّهُ عَن نَّفْسِهِ فَاسْتَعْصَمَ ۖ وَلَئِن لَّمْ يَفْعَلْ مَا آمُرُهُ لَيُسْجَنَنَّ وَلَيَكُونًا مِّنَ الصَّاغِرِينَ ﴿٣٢﴾

(३२) (त्यसबेला मिस्रका अज़ीजकी पत्नीले) भनी कि यही नै हो जसको विषयमा तिमी मलाई नराम्रो भनिराखेका थियौ ।[2] मैले हरप्रकारले यसबाट आफ्नो स्वार्थ सिद्ध गर्न चाहें, तर यो बेदाग़ बचिरहयो, तथा जे-जति म योसित भनिराखेको छु, यदि यसले गरेन भने निःसन्देह यो बन्दी बनाइनेछ तथा निश्चय यो अत्याधिक अपमानित हुनेछ ।[3]

قَالَ رَبِّ السِّجْنُ أَحَبُّ إِلَيَّ مِمَّا يَدْعُونَنِي إِلَيْهِ ۖ وَإِلَّا تَصْرِفْ عَنِّي

(३३) (यूसुफले) भने कि हे मेरा प्रभु ! जुन कुरातिर यी स्त्रीहरू मलाई बोलाइराखेका छन्, त्यसभन्दा त कारागार मलाई अत्याधिक प्रिय छ,

[1]यसको अर्थ यो होइन कि फरिश्ताहरू (स्वर्गदूत) मनुष्यभन्दा रूप-रेखामा राम्रा तथा श्रेष्ठ छन्, किनभने फरिश्ताहरूलाई मनिसहरूले देखेकै छैन । यसको अतिरिक्त मनुष्यहरूका लागि स्वयं अल्लाहले कुरआनमा स्पष्ट गरेको छ कि हामीले त्यसलाई सर्वोत्तम रूपमा सृष्टि गरेका छौं । यी स्त्रीहरूले मनुष्यको रूपलाई यसकारण नगण्य गरे कि उनीहरूले सुन्दरताको रूप जुन मनुष्यको रूपमा देखे उनका दृष्टिले कहिल्यै देखेको थिएन । तथा उनीहरूले फरिश्ताहरूसित तुलना यसकारण गरे कि जनसामान्य यही बुझ्दछ कि फरिश्ताहरू गुण तथा रूपका अनुसार यस्ता रूप राख्दछन् जुन मनुष्यको रूपभन्दा उच्च छ । यसबाट यो ज्ञात हुन्छ कि नबीहरूका असाधारण विशेषता तथा गुणहरूका कारण उनीहरूलाई मानव जातिवाट निकालेर दिव्य प्रकाश भएको प्राणीमा राखिदिनु प्रत्येक युगका यस्ता मानिसहरूका कार्य रहेको छ, जो नबूअत तथा त्यसको पदबाट अनभिज्ञ हुन्छन् ।

[2]जव अज़ीजकी पत्नीले देख्यो कि त्यसको चाल सफल भइराखेको छ तथा स्त्रीहरू यूसुफको सुन्दरताको प्रकाशवाट मुग्ध भइहालेका छन् त भन्नथाली कि यसको एक झलकवाट तिम्रो यो दशा भइहालेको छ त के तिमी अहिले पनि मलाई यसको प्रेममा परिरहने कुरोलाई नराम्रो भन्नेछौ ? यही त्यो दास हो जसको विषयमा तिमी मलाई धिक्कार्दछौ ।

[3]स्त्रीहरूलाई मुग्ध भएको देखेर उसको साहस झन् बढ्यो तथा निर्लज्ज भई उसले आफ्नो नराम्रा इच्छालाई एक पटक पुनः व्यक्त गऱ्यो ।

كَيْدَهُنَّ أَصْبُ إِلَيْهِنَّ وَأَكُنْ مِّنَ الْجَاهِلِينَ ﴿٣٣﴾

यदि तिमीले उनीहरूका छल मबाट समाप्त गरेनौं भने म यिनीहरूतिर आकर्षित हुनेछु, तथा साह्रै मूर्खहरूमा सम्मिलित हुनेछु ।[1]

فَاسْتَجَابَ لَهُ رَبُّهُ فَصَرَفَ عَنْهُ كَيْدَهُنَّ ۚ إِنَّهُ هُوَ السَّمِيعُ الْعَلِيمُ ﴿٣٤﴾

(३४) त्यसको प्रभुले त्यसको प्रार्थना स्वीकार गऱ्यो तथा ती स्त्रीहरूको छलबाट उसलाई बचाइहाल्यो । नि:सन्देह त्यो सर्वश्रोता तथा सर्वज्ञ छ ।

ثُمَّ بَدَا لَهُم مِّن بَعْدِ مَا رَأَوُا الْآيَاتِ لَيَسْجُنُنَّهُ حَتَّىٰ حِينٍ ﴿٣٥﴾

(३५) अनि ती सबै लक्षणहरू देखे पश्चात उनीहरूलाई यही उचित लाग्यो कि यूसुफलाई केही समयका लागि कारागार मै राखून् ।[2]

وَدَخَلَ مَعَهُ السِّجْنَ فَتَيَانِ ۖ قَالَ أَحَدُهُمَا إِنِّي أَرَانِي أَعْصِرُ خَمْرًا ۖ وَقَالَ الْآخَرُ إِنِّي أَرَانِي أَحْمِلُ فَوْقَ رَأْسِي خُبْزًا تَأْكُلُ الطَّيْرُ مِنْهُ ۖ نَبِّئْنَا بِتَأْوِيلِهِ ۖ إِنَّا نَرَاكَ مِنَ الْمُحْسِنِينَ ﴿٣٦﴾

(३६) तथा त्यसको साथमै दुईटा अन्य नवयुवकहरू कारागारमा आए । उनीहरूमध्ये एउटाले भन्यो कि मैले स्वप्नमा आफूलाई मदिरा निचारिराखेको देखेको छु तथा अर्कोले भन्यो कि मैले आफूलाई देखेको छु कि म आफ्नो टाउकोमाथि रोटी राखेको छु, जसलाई पंक्षीहरू खाइराखेका छन्, हामीलाई तपाईंले

[1]आदरणीय यूसुफले यो प्रार्थना आफ्नो हृदयले गरे किनभने एउटा ईमान्दारको लागि प्रार्थना पनि एउटा हतियार हो । हदीसमा वर्णित छ कि सात मानिसहरूलाई अल्लाह तआलाले अर्शको छायाँ प्रदान गर्नेछ। उनीहरूमध्ये एउटा त्यो व्यक्ति हो, जसलाई एउटा यस्तो स्त्री पापको लागि आमन्त्रित गर्दछे, जो सुन्दर पनि हुन्छ तथा उच्च पदमा आसीन पनि हुन्छ । परंन्तु त्यो त्यसको उत्तरमा यो भनिदिन्छ कि म त "अल्लाहसित तर्सन्छु ।" (सहीह बुख़ारी किताबुल आज़ान बाबु मन जलस फिल मस्जिद यन्तज़िरूस्सलात व फ़जलुल मस्जिद तथा सहीह मुस्लिम किताबुज़्ज़कात बाबु फ़जल एखफा इिअस्सदक:)

[2]सत्यता तथा पवित्रता स्पष्ट भइहाले पश्चात पनि यूसुफलाई कारागारमा हाल्नुको यही कारण उनको समक्ष हुनसक्थ्यो कि मिस्री अज़ीज आदरणीय यूसुफलाई आफ्नी पत्नीबाट टाढा राख्न चाहन्थ्यो होला ताकि पुन: त्यसले यूसुफलाई आफ्नो चालमा फँसाउन प्रयत्न नगरोस्, जस्तो कि उसको यस्तो विचार थियो ।

यसको फल (परिणाम) भनिदिनुस्, हामीलाई त तपाईं गुणवान् व्यक्ति प्रतीत हुनुहुन्छ ।[1]

(३७) (यूसुफले भने तिमीलाई जुन खाना दिइन्छ, त्यो तिम्रो पासमा पुग्नुभन्दा पूर्व नै म तिमीलाई त्यसको अर्थ भनिदिनेछु । यो सबै कुरा त्यस ज्ञानको परिणाम हो, जुन मलाई मेरो प्रभुले सिखाएको छ ।[2] मैले ती मानिसहरूको धर्म छाडिदिएको छु जो अल्लाहमा निष्ठा राख्दैन तथा आख़िरतलाई पनि अस्वीकार गर्दछन् ।[3]

قَالَ لَا يَأْتِيكُمَا طَعَامٌ تُرْزَقَانِهِۦٓ إِلَّا نَبَّأْتُكُمَا بِتَأْوِيلِهِۦ قَبْلَ أَن يَأْتِيَكُمَا ۚ ذَٰلِكُمَا مِمَّا عَلَّمَنِى رَبِّىٓ ۚ إِنِّى تَرَكْتُ مِلَّةَ قَوْمٍ لَّا يُؤْمِنُونَ بِٱللَّهِ وَهُم بِٱلْءَاخِرَةِ هُمْ كَٰفِرُونَ ﴿٣٧﴾

(३८) म आफ्नो पिता तथा पूर्वजहरूको धर्मको अनुयायी हूँ अर्थात् इब्राहीम, इसहाक एवं याकूबका धर्मको,[4] हामीलाई कदापि यो स्वीकार छैन कि

وَٱتَّبَعْتُ مِلَّةَ ءَابَآءِىٓ إِبْرَٰهِيمَ وَإِسْحَٰقَ وَيَعْقُوبَ ۚ مَا كَانَ لَنَآ

[1]यी दुबै नवयुवक राजदरबारसित सम्बन्ध राख्दथे। एउटा रक्सी खुवाउन नियुक्त थियो अर्कोले रोटी पकाउन। कुनै कारणले उनीहरूलाई कारागारमा हालिदिइएको थियो। आदरणीय यूसुफ अल्लाहका पैग़म्बर थिए, धर्मको प्रचार-प्रसारको साथ-साथै इबादत, तपस्या, संयम, सत्यता तथा चरित्र एवं कर्ममा अन्य बन्दीहरूभन्दा श्रेष्ठ थिए। यसका अतिरिक्त स्वप्नहरूका अर्थको ज्ञान अल्लाहले प्रदान गरेको थियो । यी दुबैले स्वप्न देखे त प्राकृतिक रूपले उनीहरू आदरणीय यूसुफको पासमा आए तथा भने कि तपाईं हामीलाई भला मानिसहरू मध्येको लागिराख्नु भएको छ। हामीलाई हाम्रा स्वप्नहरूको अर्थ भन्नुस् । (محسن) को एउटा अर्थ केही धर्म गुरुहरूले यो पनि गरेका छन् कि तपाईं स्वप्नहरूको अर्थ राम्ररी भन्नुहुन्छ ।

[2]अर्थात् म जुन फल भन्नेछु, त्यो भविष्यवेत्ताहरू तथा ज्योतिषिहरूको विचार तथा अनुमानमा आधारित हुने छैन जसमा त्रुटि तथा उचित दुबैको सम्भावना हुन्छ। बरू मेरो स्वप्नफल निश्चित ज्ञानमा आधारित हुनेछ, जुन अल्लाहको तर्फबाट मलाई प्रदान गरिएको छ, जसमा त्रुटि हुने कुनै पनि सम्भावना छैन ।

[3]यहाँ अन्तज्ञान तथा अल्लाहद्वारा प्रदान गरिएको ज्ञानको कारण भनिदैछ कि मैले तिनीहरूको धर्म त्यागी दिएको छु, जो अल्लाह तथा आख़िरत (परलोक) मा ईमान राख्दैन, त्यसको परिणामस्वरूप अल्लाहको कृपा ममाथि भयो ।

[4]पूर्वजलाई पनि पिता भनिएको छ किनभने उनीहरू पनि पिता नै हुन्। अनि क्रममा पनि पितामह (इब्राहीम) अनि निकटवर्ती बाजे (इसहाक) एवं त्यस पश्चात पिताको वर्णन गरे। अर्थात प्रथमतः प्रथम मूल, अनि द्वितीय मूल एवं त्यसपश्चात तृतीय मूलको वर्णन गरे।

اَنۡ نُّشۡرِكَ بِاللّٰهِ مِنۡ شَیۡءٍ ؕ ذٰلِكَ مِنۡ فَضۡلِ اللّٰهِ عَلَیۡنَا وَعَلَی النَّاسِ وَلٰكِنَّ اَكۡثَرَ النَّاسِ لَا یَشۡكُرُوۡنَ ﴿۳۸﴾

हामीले अल्लाह तआलासँग कसैलाई पनि साझेदार बनाऔं,[1] हामीमाथि तथा अन्य सबै मानिसहरूमाथि अल्लाह (तआला) को यो विशेष कृपा हो, तर अधिकतर मानिसहरू कृतघ्न हुन्छन् ।

یٰصَاحِبَیِ السِّجۡنِ ءَاَرۡبَابٌ مُّتَفَرِّقُوۡنَ خَیۡرٌ اَمِ اللّٰهُ الۡوَاحِدُ الۡقَهَّارُ ﴿۳۹﴾

(३९) हे मेरा कारागारका साथीहरू ![2] के विभिन्न प्रकारका कैयन् देवताहरू श्रेष्ठ छन्[3] अथवा एक अल्लाह सर्वशक्तिमान?

مَا تَعۡبُدُوۡنَ مِنۡ دُوۡنِهٖۤ اِلَّاۤ اَسۡمَآءً سَمَّیۡتُمُوۡهَاۤ اَنۡتُمۡ وَاٰبَآؤُكُمۡ مَّاۤ اَنۡزَلَ اللّٰهُ بِهَا مِنۡ سُلۡطٰنٍ ؕ اِنِ الۡحُكۡمُ اِلَّا لِلّٰهِ ؕ اَمَرَ اَلَّا تَعۡبُدُوۡۤا اِلَّاۤ اِیَّاهُ ؕ ذٰلِكَ الدِّیۡنُ الۡقَیِّمُ وَلٰكِنَّ اَكۡثَرَ النَّاسِ لَا یَعۡلَمُوۡنَ ﴿۴۰﴾

(४०) त्यसका अतिरिक्त जसको पूजा तिमीले गरिराखेका छौ, ती सबै नाम मात्रकै हुन्, जुन तिमीले तथा तिम्रा पूर्वजहरूले स्वयं रचिहालेका छौ । अल्लाह तआलाले यिनको कुनै प्रमाण पठाएको छैन,[4] निर्णय दिनु अल्लाह (तआला) कै काम हो, त्यसको आदेश छ कि तिमी सबै त्यसका अतिरिक्त कसैको इबादत (उपासना) नगर ।

[1]यो त्यही एकेश्वरवादको आमन्त्रण तथा मूर्तिपूजनको खण्डन हो, जुन प्रत्येक नबीको मूल तथा प्रथम शिक्षा तथा आमन्त्रण हुने गर्थ्यो ।

[2]कारागारका साथी यसकारण भने कि यी सबै एक अवधिदेखि कारागारमा बन्द भई आइराखेका थिए ।

[3]यो विभेद अस्तित्व, गुणहरू तथा संख्याको आधारमा छ अर्थात् ती प्रभु जो अस्तित्वमा एक-अर्काबाट भिन्न तथा गुणहरूमा एक-अर्कासित अलग तथा संख्यामा पनि अनेक छन्, यी श्रेष्ठ हुन् अथवा त्यो अल्लाह, जो अस्तित्व एवं गुणहरूमा एक छ, जसको न कोही समतुल्य छ न साझेदार तथा त्यो सबैमाथि प्रभावशाली तथा शासक छ ?

[4]यसको एक अर्थ त यो हो कि त्यसको नाम देवता, तिमीले स्वयं राखेका छौ, जबकि न ती देवता हुन् न तिनका विषयमा अल्लाहको तर्फबाट प्रमाण नै पठाइएको छ । दोस्रो अर्थ यो हो कि ती देवताहरूका जो विभिन्न नाम तिमीले राखेका छौ, जस्तै ख्वाजा गरीब नवाज, गंज बख़्श, शकरगंज आदि । यी सबै तिमीबाट आफूले बनाइएका हुन् । तिनको कुनै प्रमाण अल्लाहले पठाएन ।

يَٰصَٰحِبَيِ ٱلسِّجۡنِ أَمَّآ أَحَدُكُمَا فَيَسۡقِي رَبَّهُۥ خَمۡرٗاۖ وَأَمَّا ٱلۡأٓخَرُ فَيُصۡلَبُ فَتَأۡكُلُ ٱلطَّيۡرُ مِن رَّأۡسِهِۦۚ قُضِيَ ٱلۡأَمۡرُ ٱلَّذِي فِيهِ تَسۡتَفۡتِيَانِ ۝٤١

यही धर्म सत्य छ,[1] तर अधिकतर मानिसहरू बुझ्दैनन् ।[2]

(४१) हे मेरा कारागारका साथीहरू ![3] तिमी दुबैमध्ये एउटा त आफ्नो राजालाई मदिरापान गराउनका लागि नियुक्त हुनेछ,[4] तर अर्कोलाई फाँसी दिइनेछ तथा पंक्षीहरू त्यसको टाउको लुछी-लुछी खानेछन् ।[5] तिमी दुबैले जुन विषयमा सोधिराखेका थियौ, त्यसको निर्णय भइहाल्यो ।[6]

[1]यही धर्म, जसतिर म तिमीलाई डाकिराखेको छु, जसमा एक अल्लाहको इबादत छ, सत्य तथा स्थायी छ, जसको आदेश अल्लाहले दिएको छ ।

[2]जसका कारण अधिकतर मानिसहरू शिर्क गर्दछन् ।

﴿وَمَا يُؤۡمِنُ أَكۡثَرُهُم بِٱللَّهِ إِلَّا وَهُم مُّشۡرِكُونَ﴾

"उनीहरूमा अधिकतर मानिसहरू अल्लाहमाथि ईमान राख्नुका उपरान्त पनि शिर्क गर्ने नै हुन् ।" (सूर: यूसुफ-१०६) तथा भन्नुभयो:

﴿وَمَا أَكۡثَرُ ٱلنَّاسِ وَلَوۡ حَرَصۡتَ بِمُؤۡمِنِينَ﴾

"हे पैगम्बर ! तिम्रो इच्छाका उपरान्त अधिकतर मानिसहरूले अल्लाहमाथि ईमान स्थापित गर्ने छैनन् ।" (सूर: यूसुफ-१०३)

[3]एकेश्वरवादको प्रवचन दिए पश्चात अब आदरणीय यूसुफ उनीद्वारा वर्णित स्वप्नहरूका फलको वर्णन गरिराखेका छन् ।

[4]यो त्यो व्यक्ति हो जसले स्वप्नमा आफूलाई अंगूरको रस तयार गरिराखेको देखेको थियो । तैपनि उहाँले दुबैमध्ये कुनै एउटालाई निर्धारित गरेर भन्नुभएन कि मर्ने पहिला नै दुख तथा चिन्तामा घेरिन्छ ।

[5]यो त्यो व्यक्ति हो जसले स्वप्नमा आफ्नो टाउकोमा रोटी राखिएको देखेको थियो ।

[6]अर्थात् अल्लाहद्वारा लेखिएको भाग्यमा पहिले नै लेखिएको थियो तथा जुन फल मैले भनेको छु, यो अन्ततः पूरा भएर नै छाड्नेछ । जस्तो कि हदीसमा वर्णित छ कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो:

وَقَالَ لِلَّذِي ظَنَّ أَنَّهُ نَاجٍ مِّنْهُمَا اذْكُرْنِي عِندَ رَبِّكَ فَأَنسَاهُ الشَّيْطَانُ ذِكْرَ رَبِّهِ فَلَبِثَ فِي السِّجْنِ بِضْعَ سِنِينَ ﴿٤٢﴾

(४२) तथा जसको सम्बन्धमा यूसुफको विचार थियो कि ती दुवैमध्ये यो मुक्त हुनेछ, त्यससित भने कि आफ्नो राजासित मेरो चर्चा पनि गरिदिनु, पछि त्यसलाई शैतानले राजासित वर्णन गर्न बिर्साइदियो तथा यूसुफले कैयन् वर्षसम्म कारागारमा बिताए ।[1]

وَقَالَ الْمَلِكُ إِنِّي أَرَىٰ سَبْعَ بَقَرَاتٍ سِمَانٍ يَأْكُلُهُنَّ سَبْعٌ عِجَافٌ وَسَبْعَ سُنبُلَاتٍ خُضْرٍ وَأُخَرَ يَابِسَاتٍ ۖ يَا أَيُّهَا الْمَلَأُ أَفْتُونِي فِي رُؤْيَايَ إِن كُنتُمْ لِلرُّؤْيَا تَعْبُرُونَ ﴿٤٣﴾

(४३) तथा राजाले भन्यो कि मैले सपना देखेको छु कि सात हृष्ट-पुष्ट गाईहरू छन्, जसलाई सातवटा पातली-क्षीण गाईहरूले खाइराखेका छन् तथा सातवटा बालाहरू (अन्नका) हरा-भरा तथा सात अन्य बिल्कुलै सुकेका छन् । हे सभासद्हरू ! मेरो सपनाको फल (अर्थ) भन यदि तिमी स्वप्नको फल भन्न सक्दछौ ।

قَالُوا أَضْغَاثُ أَحْلَامٍ ۖ وَمَا نَحْنُ بِتَأْوِيلِ الْأَحْلَامِ بِعَالِمِينَ ﴿٤٤﴾

(४४) उनीहरूले उत्तर दिए कि यी त संभ्रमित सपनाहरू हुन् तथा यसप्रकारका व्यग्र स्वप्नको फल हामी जान्दैनौं ।[2]

"स्वप्न जबसम्म त्यसको फल निकालिंदैन, पंक्षीको खुट्टामा छ । जब फल निकालिन्छ त घटित भईहाल्छ ।" (मुसनद अहमद, उदधृत इब्ने कसीर)

[1](بِضْعَ) को शब्द तीन देखि लिएर नौं सम्मका अंकहरूलाई भनिन्छ । वहब बिन मुनव्वहको कथन छ कि आदरणीय अय्यूब परीक्षामा तथा यूसुफ कारागारमा सात वर्षसम्म रहे तथा बुख्तनसरको प्रकोप पनि सात वर्ष रह्यो । र केही ज्ञाताहरूका निकट बाह्र वर्ष तथा केहीका निकट चौदह वर्ष कारागारमा रहे ।

[2](أضغاث) बहुवचन हो (ضغث) को, जसको अर्थ 'घासको गठ्ठर' हो । (حلم، أحلام) (अर्थ स्वप्न) को बहुवचन हो । (أضغاث أحلام) को अर्थ हुनेछ 'चिन्तापूर्ण स्वप्न' अथवा 'व्यग्रचित स्वप्न', जसको कुनै फल नहोस् । यो स्वप्न त्यस राजालाई आयो मिस्री अज़ीज जसको मन्त्री थियो । अल्लाह तआलाले यस स्वप्नद्वारा यूसुफलाई कारागारबाट निकाल्नु थियो । अत: राजाका भविष्यवेत्ता तथा ज्योतिषिहरूले यस विलक्षण स्वप्नको फल भन्नमा आफ्नो असमर्थता व्यक्त गरे । केही भन्दछन् कि ज्योतिषिहरूको यस कथनको अर्थ साधारणत: स्वप्नफल भन्नुको ज्ञानको खण्डन हो तथा केहीले भन्छन् कि उनीहरू स्वप्नफल भन्नेको ज्ञानबाट अन्जान

وَقَالَ الَّذِىْ نَجَا مِنْهُمَا وَادَّكَرَ بَعْدَ اُمَّةٍ اَنَا اُنَبِّئُكُمْ بِتَاْوِيْلِهٖ فَاَرْسِلُوْنِ ﴿٤٥﴾

(४५) तथा यी बन्दीहरूमध्ये छाडिएकोलाई एकछिन पश्चात स्मरण भयो तथा भन्नलाग्यो म तिमीलाई यसको फल भनिदिनेछु, मलाई जानुको आज्ञा प्रदान गर्नुस् ।[1]

يُوْسُفُ اَيُّهَا الصِّدِّيْقُ اَفْتِنَا فِىْ سَبْعِ بَقَرٰتٍ سِمَانٍ يَّاْكُلُهُنَّ سَبْعٌ عِجَافٌ وَّسَبْعِ سُنْۢبُلٰتٍ خُضْرٍ وَّاُخَرَ يٰبِسٰتٍ لَّعَلِّىْٓ اَرْجِعُ اِلَى النَّاسِ لَعَلَّهُمْ يَعْلَمُوْنَ ﴿٤٦﴾

(४६) हे यूसुफ ! हे अतिसत्यवादी यूसुफ ! तपाईं हामीलाई यस स्वप्नको फल (अर्थ) भनिदिनुस् कि सातवटी मोटी-मोटी गाईहरू छन्, जसलाई सातवटी दुब्ली (अस्वस्थ) गाईहरूले खाइराखेका छन् तथा सात निकै हरिया बाला छन् तथा सातवटै अन्य पनि सुकेका छन्, ताकि म वापस गई उनीहरूसित भनुँ कि उनीहरू सबै जानिहालून् ।

قَالَ تَزْرَعُوْنَ سَبْعَ سِنِيْنَ دَاَبًا ۚ فَمَا حَصَدْتُّمْ فَذَرُوْهُ فِىْ سُنْۢبُلِهٖٓ اِلَّا قَلِيْلًا مِّمَّا تَاْكُلُوْنَ ﴿٤٧﴾

(४७) (यूसुफले) उत्तर दिए कि तिमी सातवर्ष निरन्तर नियमबद्ध भई बिउ छर्नु तथा त्यसलाई काटेर बालाहरूसित नै रहन दिनू, आफ्नो भोजनको लागि अलिकति मात्रा बाहेक ।

ثُمَّ يَاْتِىْ مِنْۢ بَعْدِ ذٰلِكَ سَبْعٌ شِدَادٌ يَّاْكُلْنَ مَا قَدَّمْتُمْ لَهُنَّ

(४८) त्यस पश्चात सात वर्ष अत्यन्त अकाल आउने छन्, उनीहरू त्यस अन्नलाई खानेछन्, जुन तिमी उनका लागि भण्डार गरिराखेका छौं,[2] त्यसबाहेक

थिएनन् न यसलाई उनीहरूले नकारे, उनले मात्र यस स्वप्नको अर्थ भन्न असमर्थता व्यक्त गरे ।

[1]यो कारागारबाट छाडिने एउटा साथी थियो, जसलाई आदरणीय यूसुफले भनेका थिए कि आफ्नो मालिकसित मेरो वर्णन गर्नु ताकि मलाई छाडिने कुराको व्यवस्था हुनसकोस् । त्यसलाई सहसा स्मरण भयो तथा उसले भन्यो कि मलाई समय देउ म तिमीलाई आएर यसको अर्थ भन्नेछु । अत: त्यो निस्केर सीधा यूसुफको पासमा पुग्यो तथा स्वप्नको विवरण सुनायो तथा त्यसको अर्थ सोध्यो ।

[2]अल्लाह तआ़लाले आदरणीय यूसुफलाई 'स्वप्नफल' को ज्ञान पनि प्रदान गरेको थियो । यसकारण उनी यस स्वप्नको अर्थसम्म शीघ्र पुगिहाले । उनले पुष्ट स्वस्थ गाईहरूबाट तात्पर्य यस्ता सात वर्ष लिए जसमा अधिक उब्जनी हुनेछ तथा सात दुर्बल गाईहरूबाट त्यसका विपरीत सात वर्ष सुख्खा अकालका यसैप्रकार सात हरिया बालाहरूबाट तात्पर्य लिए कि धर्तीले अधिक उब्जनी दिनेछ तथा सात सुख्खा बालाहरूबाट अर्थ यो लिए कि सात वर्षहरूमा

إِلَّا قَلِيلًا مِّمَّا تُحْصِنُونَ ﴿٤٨﴾

जुन अलिकति तिमी रोकिराख्छौ ।[1]

ثُمَّ يَأْتِي مِن بَعْدِ ذَٰلِكَ عَامٌ فِيهِ يُغَاثُ النَّاسُ وَفِيهِ يَعْصِرُونَ ﴿٤٩﴾

(४९) अनि यस पश्चात जुन वर्ष आउनेछन्, त्यसमा मानिसहरूले प्रशस्त वर्षा प्राप्त गर्नेछन् र त्यसमा उनीहरूले (अंगूरको रस पनि) निकै निचार्नेछन् ।[2]

وَقَالَ الْمَلِكُ ائْتُونِي بِهِ ۖ فَلَمَّا جَاءَهُ الرَّسُولُ قَالَ ارْجِعْ إِلَىٰ رَبِّكَ فَاسْأَلْهُ مَا بَالُ النِّسْوَةِ اللَّاتِي قَطَّعْنَ أَيْدِيَهُنَّ ۚ إِنَّ رَبِّي بِكَيْدِهِنَّ عَلِيمٌ ﴿٥٠﴾

(५०) तथा राजाले भनें कि त्यसलाई (यूसुफ) मकहा ल्याउ ।[3] जब सन्देशबाहक त्यसको (यूसुफको) पास पुग्यो त उनले भनें कि आफ्नो राजाको पासमा फर्केर जाउ तथा उनीसित सोध कि ती स्त्रीहरूको वास्तविक घटना के छ जसले आफ्ना हात काटेका थिए ।[4] तिनका छललाई उचितरूपले जान्ने मेरो प्रभु नै छ ।

धर्तीमा उब्जनी हुनेछैन । तथा पछि त्यसको लागि प्रयोजन पनि भनें कि सात वर्ष तिमी निरन्तर कृषि गर तथा जुन अन्न हुन्छ, त्यसलाई काटेर वालाहरूसित राख ताकि तिनमा अनाज वढी सुरक्षित रहोस्, अनि जब सात वर्ष अकालका आउनेछन् त यो अनाज तिम्रो काम आउनेछ, जसको भण्डार अब तिमीले गर्नेछौ ।

[1](مما تحصنون) वाट तात्पर्य विउको लागि सुरक्षित दानाहरू हुन्, जुन पुनः छरिन्छन् ।

[2]अर्थात् अकालका सात वर्ष व्यतीत भएपश्चात निकै वर्षा हुनेछ, जसको परिणामस्वरूप निकै उब्जनी हुनेछ तथा तिमी अंगूरहरूवाट रस निकाल्नेछौ, जैतूनको तेल निकाल्नेछौ तथा पशुहरूवाट दूध निकाल्नेछौ । स्वप्नको यस फलसित स्वप्नको कति राम्रो सम्बन्ध छ, जसलाई केवल त्यसैले बुझ्न सक्छ, जसलाई अल्लाह तआलाले यस्तो उचित योग्यता, प्रबोध तथा ज्ञान प्रदान गर्दछ, जुन अल्लाह तआलाले आदरणीय यूसुफलाई प्रदान गरेको थियो ।

[3]अर्थ यो हो कि जव व्यक्ति स्वप्नको अर्थ ज्ञात गरेर राजाको पासमा गयो तथा त्यसलाई भन्यो, तव त्यो त्यस अर्थवाट तथा आदरणीय यूसुफले भनेको योजनाबाट अत्याधिक प्रभावित भयो तथा त्यसले अनुमान लगायो कि त्यो व्यक्ति जसलाई दीर्घकालदेखि कारागारमा राखिएको छ, विशेष ज्ञान महानता एवं उत्तम प्रतिभाको व्यक्ति हो । अतः राजाले उनलाई दरवारमा प्रस्तुत गर्न आदेश दियो ।

[4]आदरणीय यूसुफले देखे कि राजा अब कृपा गर्न चाहन्छ, त उनले यसप्रकार मात्र शाही कृपाले कारागारवाट निस्कन चाहेनन्, बरू आफ्नो चरित्रको उच्चता तथा पवित्रतालाई सिद्ध गर्न प्राथमिकता दिए ताकि संसार समक्ष उहाँको चरित्रको सौन्दर्य तथा उच्चता प्रष्ट भइहालोस्, किनभने अल्लाहतिर आव्हान गर्नको लागि यो सत्यता तथा पवित्रता एवं सुचरित्रता अति आवश्यक छ ।

قَالَ مَا خَطْبُكُنَّ إِذْ رَٰوَدتُّنَّ يُوسُفَ عَن نَّفْسِهِۦ ۚ قُلْنَ حَٰشَ لِلَّهِ مَا عَلِمْنَا عَلَيْهِ مِن سُوٓءٍ ۚ قَالَتِ ٱمْرَأَتُ ٱلْعَزِيزِ ٱلْـَٰٔنَ حَصْحَصَ ٱلْحَقُّ أَنَا۠ رَٰوَدتُّهُۥ عَن نَّفْسِهِۦ وَإِنَّهُۥ لَمِنَ ٱلصَّٰدِقِينَ ﴿٥١﴾

(५१) राजाले सोध्यो, हे स्त्रीहरू ! त्यसबेलाको सत्य घटना के हो, जब तिमीहरूले छल गरेर यूसुफलाई त्यसको हार्दिक इच्छाबाट विचलित गर्न चाहन्थ्यौ, तिनीहरूले स्पष्ट उत्तर दिए कि (अल्लाह जान्दछ) हामीले यूसुफमा कुनै नराम्रो कुरो पाएनौं,[१] अनि त अज़ीजकी पत्नी पनि बोलिहाली कि अब त सत्य कुरा स्पष्ट भइहालेको छ । मैले नै त्यसलाई फकाउने प्रयत्न गरेकी थिएँ । नि:सन्देह त्यो सत्यवादीहरूमध्ये हो ।[२]

ذَٰلِكَ لِيَعْلَمَ أَنِّى لَمْ أَخُنْهُ بِٱلْغَيْبِ وَأَنَّ ٱللَّهَ لَا يَهْدِى كَيْدَ ٱلْخَآئِنِينَ ﴿٥٢﴾

(५२) (यूसुफले भने) यो यसकारण कि (अज़ीज) लाई ज्ञात होस् कि मैले उसँग विश्वासघात गरेको छैन ।[३] तथा यो पनि कि अल्लाह छली एवं कपटीहरूलाई चाल चल्न दिँदैन ।[४]

[१]राजाबाट सोधे पश्चात सबै स्त्रीहरूले यूसुफको पवित्रतालाई स्वीकार गरे ।

[२]अब अज़ीजकी पत्नी (जुलेखाको) लागि पनि यो स्वीकार गरिहाल्नुका अतिरिक्त कुनै उपाय शेष रहेन कि यूसुफ निर्दोष छ तथा यो चाल मेरो तर्फबाट भएको थियो, यस फरिश्ता जस्तो मानिसको यस त्रुटिसँग कुनै सम्बन्ध छैन ।

[३]जब कारागारमा आदरणीय यूसुफलाई यो सम्पूर्ण बृत्तान्त सुनाइयो त त्यसलाई सुनेर यूसुफले भने तथा केही ज्ञानीहरूका अनुसार राजाकहाँ गएर उनले यो भने तथा केही व्याख्याकारहरूका निकट यो पनि अज़ीजकी पत्नी (जुलेखा) कै कथन हो तथा अर्थ यो हो कि यूसुफको अनुपस्थितिमा पनि त्यसलाई अनुचित रूपले दोषी गरी विश्वासघात गर्दिन बरू ईमान्दारीका माँगहरूलाई आफ्नो अगाडी राख्दै आफ्नो गल्ती स्वीकार गर्दछु अथवा यो अर्थ हो कि मैले आफ्नो पतिका साथ विश्वासघात गरिन तथा कुनै महापापमा परिन । इमाम इब्ने कसीरले यसै कथनलाई प्राथमिकता दिएका छन् ।

[४]कि उनी सधैं आफ्ना छल-कपटमा सफल नै रहून् । बरू उनको प्रभाव अस्थायी तथा सीमित हुन्छ, अन्त्यमा विजय सत्य एवं सत्यवादीहरूकै हुन्छ, यद्यपि सत्यमार्गीहरूलाई अस्थायी परीक्षाको मार्गबाट हिंड्न परोस् ।

وَمَآ أُبَرِّئُ نَفْسِيٓ ۚ إِنَّ ٱلنَّفْسَ لَأَمَّارَةٌۢ بِٱلسُّوٓءِ إِلَّا مَا رَحِمَ رَبِّيٓ ۚ إِنَّ رَبِّي غَفُورٌ رَّحِيمٌ ﴿٥٣﴾

(५३) तथा म आफ्ना इन्द्रियहरूको पवित्रताको वर्णन गर्दिन ।[1] निःसन्देह मन त नराम्रो कुराकै लागि उत्तेजित गर्दछ ।[2] परन्तु यदि मेरो प्रभु नै दया गर्छ[3] भने त्यो अर्कै कुरा हो । निश्चय नै मेरो पालनकर्ता क्षमाशील कृपानिधि छ ।

وَقَالَ ٱلْمَلِكُ ٱئْتُونِي بِهِۦٓ أَسْتَخْلِصْهُ لِنَفْسِي ۖ فَلَمَّا كَلَّمَهُۥ قَالَ إِنَّكَ ٱلْيَوْمَ لَدَيْنَا مَكِينٌ أَمِينٌ ﴿٥٤﴾

(५४) तथा राजाले भने कि त्यसलाई मेरो समक्ष ल्याउ ताकि म आफ्ना निजी कार्यहरूका लागि नियुक्त गरूँ ।[4] अनि जब त्यससित वार्तालाप गर्नथाल्यो त भन्यो कि तपाईं आजदेखि हामीकहाँ सम्मानित तथा विश्वस्त हुनुहुन्छ ।[5]

[1]यसलाई यदि आदरणीय यूसुफको कथन स्वीकार गरिन्छ भने यो नम्रताको रूपमा छ, अन्यथा स्पष्टरूपले प्रकट छ कि उनको पवित्रता हरेक प्रकारले सिद्ध भइसकेको थियो तथा यदि मिस्रको मन्त्रीकी पत्नीको कथन हो (जस्तो कि इमाम इब्ने क़सीरको विचार छ) त यो वास्तविकतामा आधारित छ किनभने त्यसले आफ्नो पाप तथा यूसुफलाई फकाउने कुरोलाई स्वीकार गरिहालि ।

[2]यो त्यसले आफ्ना त्रुटिहरूको कष्ट कल्पना अथवा त्यसको कारण भनेकी छ कि मनुष्यको मन यस्तै छ कि त्यसलाई नराम्रोको लागि प्रेरित तथा उत्तेजित गर्दछ ।

[3]इन्द्रियहरूको छलबाट त्यही सुरक्षित रहन्छ जसमाथि अल्लाहको कृपा छ, जुनप्रकारले कि आदरणीय यूसुफलाई अल्लाह तआ़लाले बचायो ।

[4]जब राजा (रय्यान पुत्र वलीद) लाई यूसुफका ज्ञान तथा गुणहरूका साथ त्यसको आचरणको महत्ता तथा पवित्रता स्पष्ट भयो त उसले आदेश दियो कि उनलाई मेरो समक्ष प्रस्तुत गर, म उनलाई आफ्नो लागि चयन गर्दछु अर्थात् आफ्नो निकटवर्ती तथा विशेष सल्लाहकार नियुक्त गर्न चाहन्छु ।

[5](مَكِينٌ) (मकीन) को अर्थ हो पदाधिकारी (أَمِينٌ) (अमीन), राज्यको भेद जान्ने व्यक्ति ।

قَالَ اجْعَلْنِي عَلَىٰ خَزَائِنِ الْأَرْضِ ۖ إِنِّي حَفِيظٌ عَلِيمٌ ﴿٥٥﴾

(५५) (यूसुफले) भने कि तपाईं मलाई देशको कोषमाथि नियुक्त गरिदिनुस् ।[1] म रक्षक तथा ज्ञाता हुँ ।[2]

وَكَذَٰلِكَ مَكَّنَّا لِيُوسُفَ فِي الْأَرْضِ يَتَبَوَّأُ مِنْهَا حَيْثُ يَشَاءُ ۚ نُصِيبُ بِرَحْمَتِنَا مَنْ نَشَاءُ ۖ وَلَا نُضِيعُ أَجْرَ الْمُحْسِنِينَ ﴿٥٦﴾

(५६) तथा यसप्रकार हामीले यूसुफलाई देशको बागडोर (सत्ता) दिऔं ताकि त्यो जहाँ चाहन्छ रहन्-सहन् गरोस् ।[3] हामीले जसलाई चाहन्छौं आफ्नो कृपा पुऱ्याइदिन्छौं । हामीले पुण्य गर्नेहरूका कर्मको फल नष्ट गर्दैनौं ।[4]

---

[1](خزائن) (ख़जाएन) बहुवचन हो (خزانة) (ख़जाना) । खज़ानाको अर्थ हो 'कोष' अर्थात् यस्तो स्थानलाई भन्दछन् जहाँ वस्तुहरू सुरक्षित राखिन्छन् । धर्तीको कोषबाट तात्पर्य ती भण्डार हुन् जहाँ अनाज़ एकत्रित गरिन्छ । यसको व्यवस्था आफ्नो हातमा लिनुको इच्छा यसकारण व्यक्त गरे कि निकट भविष्यमा (स्वप्नको फललाई हेर्दै) जुन अनिकालको वर्षमा आउने थियो, त्यसको समाधानको लागि विशेष प्रबन्ध गर्न सकियोस् तथा अनाजको पर्याप्त मात्रा सुरक्षित राख्न सकियोस् । सामान्य अवस्थामा यद्यपि पद तथा पदवीको इच्छा उचित छैन, तर आदरणीय यूसुफको यस व्यवहारबाट ज्ञात हुन्छ कि विशेष अवस्थामा यदि कोही व्यक्ति यो ठान्दछ कि राष्ट्र तथा देशको सामू जुन कठिनाईहरू छन्, तिनीसित जुझ्नमा मनुष्यमा उत्तम योग्यता अनुसार पद तथा पदवीको माँग गर्नसक्छ । यसका अतिरिक्त आदरणीय यूसुफले पद तथा पदवीको कामना गरेनन् । तर जब मिस्रको राजाले स्वयं प्रस्तुत गऱ्यो त यस्तो पदको इच्छा व्यक्त गरे जसमा उनले देश तथा राष्ट्रको सेवाको पक्षलाई अधिक प्रत्यक्ष राखे ।

[2](حفيظ) म त्यसको त्यसप्रकार सुरक्षा गर्नेछु कि त्यसको कुनै अपब्यय गर्नेछैन, (عليم) त्यसलाई एकत्रित गर्न तथा व्यय गर्न एवं त्यसलाई राख्न तथा निकाल्नका निम्ति उत्तम ज्ञान राख्दछु ।

[3]अर्थात् हामीले यूसुफलाई धर्तीमा यस्तो शक्ति तथा सामर्थ्य प्रदान गऱ्यौं कि राजाले त्यही आदेश गर्थ्यो जे आदरणीय यूसुफले गर्थे, तथा मिस्रको धर्तीमा यसप्रकार अधिकार चलाउँथे जुनप्रकारले मनुष्य आफ्नो घरमा चलाउँछ तथा जहाँ चाहन्थे उनी रहन्थे, सम्पूर्ण मिस्र उनको आधीन थियो ।

[4]यो जस्तो कि प्रतिफल थियो उनको धैर्यको जुन दाज्यूहरूको क्रुरता तथा अत्याचारमा उनले राखे तथा सुदृढताको जुन जुलेखाको पापको निमन्त्रणाको समक्ष प्रयोग गरे तथा त्यस पूर्ण दृढताको जुन कारागारको जीवनकालमा अपनाए ।

وَلَأَجْرُ الْآخِرَةِ خَيْرٌ لِّلَّذِينَ آمَنُوا وَكَانُوا يَتَّقُونَ ﴿٥٧﴾

(५७) तथा निःसन्देह ईमान्दार तथा परहेज़गारहरूको पारलौकिक प्रतिफल अति उत्तम छ ।

وَجَاءَ إِخْوَةُ يُوسُفَ فَدَخَلُوا عَلَيْهِ فَعَرَفَهُمْ وَهُمْ لَهُ مُنكِرُونَ ﴿٥٨﴾

(५८) तथा यूसुफका दाजूहरू आए एवं यूसुफको पासमा गए, त उसले उनीहरूलाई चिनिहाल्यो तथा उनीहरूले उसलाई चिनेनन् ।[1]

وَلَمَّا جَهَّزَهُم بِجَهَازِهِمْ قَالَ ائْتُونِي بِأَخٍ لَّكُم مِّنْ أَبِيكُمْ ۚ أَلَا تَرَوْنَ أَنِّي أُوفِي الْكَيْلَ وَأَنَا

(५९) तथा जब उसले उनका सरसामान तयार गराइदियो तब भन्यो कि एउटै पिताबाट जुन तिमीहरूको एउटा भाई छ, त्यसलाई मेरो पासमा ल्याउ के तिमीले देखेनौ कि म तौल (नाप) पूरा-पूरा दिन्छु

आदरणीय यूसुफको पद त्यही थियो, जसमाथि पूर्व मिस्री अज़ीज आसीन थियो जसकी पत्नीले आदरणीय यूसुफलाई फकाउन असफल प्रयत्न गरेकी थिई । केही व्यक्तिहरू भन्दछन् कि राजा आदरणीय यूसुफको शिक्षा-दीक्षाको कारण मुसलमान भइहालेको थियो । यसैप्रकार केही व्यक्तिहरू भन्छन् कि मिस्री अज़ीज़ जसको नाम 'इत्फीर' थियो जसको मृत्यु भइसकेको थियो, त त्यस पश्चात जुलेख़ाको विवाह आदरणीय यूसुफसित भयो तथा दुईटा पुत्र पनि भए, एकको नाम अफराईम तथा दोस्रोको नाम मीशा थियो, अफराइमनै यूशअ बिन नून तथा आदरणीय अय्यूबकी पत्नी 'रहमत' का पिता थिए (तफ़सीर इब्ने कसीर) परन्तु यो कुरा कुनै प्रमाणित कथनबाट सिद्ध हुँदैन । यसकारण विवाह भएको कुरो उचित प्रतीत हुँदैन । यसका अतिरिक्त त्यस स्त्रीसित जसको आचरणको प्रदर्शन भयो, त्यो हुँदाहुँदै एउटा नबीको परिवारसित सम्बन्ध, अत्याधिक अनुचित कुरा लाग्दछ ।

[1]यो त्यस समयको घटना हो जब समृद्धिका सात वर्ष समाप्त भएर अकाल प्रारम्भ भयो जसले मिश्र देशको अधिकांश भागलाई पीडित गरिदियो यहाँसम्मकि कन्आनसम्म पनि यसको प्रभाव पुग्यो, जहाँ आदरणीय याकूब तथा आदरणीय यूसुफका दाजू-भाईहरू निवास गर्दथे । आदरणीय यूसुफले यस समस्याको निराकरण गर्न जुन सुव्यवस्था गरेका थिए, त्यो सार्थक भयो तथा प्रत्येक तिरबाट मानिसहरू आदरणीय यूसुफबाट अनाज लिनका लागि आएका थिए । आदरणीय यूसुफको प्रसिद्धि कन्आनसम्म पनि पुग्यो कि मिस्रको राजा यसप्रकार अनाज बिक्री गरिराखेको छ । अतः पिताको आदेशमा यूसुफका दाजुहरू पनि घरको पूँजी लिएर अन्न प्राप्तिका लागि दरबारमा पुगे, जहाँ आदरणीय यूसुफ विराज़मान थिए, जसलाई यी दाजुहरूले चिन्न सकेनन् तर यूसुफले आफ्ना दाजूहरूलाई चिनिहाले ।

خَيْرُ الْمُنْزِلِينَ ۝٥٩

तथा म पनि उत्तम प्रकारले अतिथि सत्कार गर्नेहरूमध्ये हुँ ।[1]

فَإِنْ لَمْ تَأْتُونِي بِهِ فَلَا كَيْلَ لَكُمْ عِنْدِي وَلَا تَقْرَبُونِ ۝٦٠

(६०) तर यदि तिमीले त्यसलाई मेरो पासमा लिएर आएनौं भने मेरो तर्फबाट तिमीलाई कुनै माप (मात्रा) प्राप्त हुनेछैन बरू तिमी मेरो निकट पनि आउन सक्ने छैनौं ।[2]

قَالُوا سَنُرَاوِدُ عَنْهُ أَبَاهُ وَإِنَّا لَفَاعِلُونَ ۝٦١

(६१) उनीहरूले भने ठीक छ हामीले उसको पितासँग यस विषयमा फकाएर पूरा प्रयास गर्नेछौं ।[3]

وَقَالَ لِفِتْيَانِهِ اجْعَلُوا بِضَاعَتَهُمْ فِي رِحَالِهِمْ لَعَلَّهُمْ يَعْرِفُونَهَا إِذَا

(६२) तथा आफ्ना सेवकहरूसित भने कि[4] उनको धन (पूँजी) उनीहरूकै बोराहरूमा हालिदेउ[5] ताकि जब फर्केर

[1]आदरणीय यूसुफले अन्जान बनेर जब आफ्ना दाजूहरूसित कुरा सोधे त उनीहरूले अन्य कुराहरूका साथ यो पनि भने कि हामी यहाँ दस भाई उपस्थित छौं । तर हाम्रा दुई सौतेला भाईहरू (आर्थात् अर्को आमाबाट) अन्य पनि छन्, उनीहरूमध्ये एउटा जंगलमा मारियो तथा त्यसको अर्को भाईलाई पिताले आफ्नो सान्त्वनाको लागि आफ्नो पासमा राख्नु भएको छ, त्यसलाई हामीसँग पठाउनु भएन । यस पश्चात आदरणीय यूसुफले भने कि भविष्यमा त्यसलाई पनि साथ लिएर आउनू । देख्दैनौं ? कि म नाप पनि पूरा दिन्छु तथा अतिथि सत्कार तथा सेवा पनि राम्ररी गर्दछु ।

[2]प्रलोभनका साथसाथै यो चेतावनी पनि छ कि यदि एघारौं भाईलाई साथमा ल्याएनौं भने त न तिमीले अन्न पाउँछौ न मेरो तर्फबाट यो सेवा सत्कारको प्रबन्ध हुनेछ ।

[3]अर्थात् हामीले आफ्ना पितासित त्यस भाईलाई ल्याउन माँग गर्नेछौं तथा हामीलाई विश्वास छ कि त्यसमा सफल हुनेछौं ।

[4](فتيان) (फ़ित्यान) को अर्थ हो नवयूवक जसबाट तात्पर्य हो नोकर, सेवक तथा दास, जो राजदरबारमा नियुक्त थिए ।

[5]यसबाट तात्पर्य त्यो पूँजी हो जुन यूसुफका दाजुहरूले अनाज किन्न आफ्नो साथमा ल्याएका थिए । (رحال) (रेहाल) बाट तात्पर्य उनका सामान जो यात्राको लागि बाँधिएका थिए । पूँजी गुप्तरूपले उनको यात्राको सामानमा राखिदेउ कि सम्भव छ पुनः आउनको लागि अरू पूँजी नहोस्, त यही पूँजी लिएर आऊन् । केही व्याख्याकारहरू भन्छन् कि दाजुहरूसित अन्नको मोल लिनु उनलाई राम्रो लागेन, यसकारण पूँजी फिर्ता राख्न लगाईदिए ।

انْقَلَبُوٓا إِلَىٰٓ أَهْلِهِمْ لَعَلَّهُمْ يَرْجِعُونَ ۝٦٢

आफ्ना परिवारमा जान्छन् तथा पूँजीहरूलाई चिन्दछन्, त अति सम्भव छ कि यिनी फेरि आऊन् ।

فَلَمَّا رَجَعُوٓا إِلَىٰٓ أَبِيهِمْ قَالُوا يَٰٓأَبَانَا مُنِعَ مِنَّا الْكَيْلُ فَأَرْسِلْ مَعَنَآ أَخَانَا نَكْتَلْ وَإِنَّا لَهُۥ لَحَٰفِظُونَ ۝٦٣

(६३) जब यिनीहरू फर्केर आफ्नो पिताको पासमा गए त भन्नलागे हामीबाट त अन्नको नाप रोकिहालिएको छ ।[1] अब तपाईंले हामीसँग भाईलाई पठाइदिनुस् ताकि हामी नाप भरेर ल्याऊ हामी त्यसको रक्षाको उत्तरदायी छौं ।

قَالَ هَلْ ءَامَنُكُمْ عَلَيْهِ إِلَّا كَمَآ أَمِنتُكُمْ عَلَىٰٓ أَخِيهِ مِن قَبْلُ ۖ فَاللَّهُ خَيْرٌ حَٰفِظًا ۖ وَهُوَ أَرْحَمُ الرَّٰحِمِينَ ۝٦٤

(६४) (याकूबले) भनें कि के म यसको विषयमा तिम्रो त्यसरी नै विश्वास गरिहालूँ जसरी यसभन्दा अगाडी त्यसको दाजुको विषयमा विश्वास गरें ?[2] अतः अल्लाह तआला नै अति उत्तम रक्षक छ तथा त्यो सबै दयावान्हरूभन्दा अत्याधिक दयावान् छ ।[3]

وَلَمَّا فَتَحُوا مَتَٰعَهُمْ وَجَدُوا بِضَٰعَتَهُمْ رُدَّتْ إِلَيْهِمْ ۖ قَالُوا يَٰٓأَبَانَا مَا نَبْغِي ۖ هَٰذِهِۦ بِضَٰعَتُنَا

(६५) तथा जब उनीहरूले आफ्नो सामान खोले त आफ्नो पूँजी विद्यमान पाए जुन उनीहरूलाई फर्काइएको थियो । भन्नलागे हाम्रा पिताजी ! हामीलाई अरू के चाहियो र ?[4] हेर्नुस् यो

[1]अर्थ यो हो कि भविष्यमा अन्न बिनयामीनलाई पठाउनुसँग प्रतिबन्धित छ । यदि यो साथमा जाँदैन भने अनाज प्राप्त हुनेछैन । यसकारण अवश्य साथमा पठाइदिनुस् ताकि हामीलाई पुनः यसैप्रकार अन्न प्राप्त हुन सकोस्, जुनप्रकार यसपटक प्राप्त भएको छ । तथा यसप्रकारको भय नगर्नुस् जुनप्रकार यूसुफलाई पठाउँदा गर्नुभएको थियो, हामीले त्यसको रक्षा गर्नेछौं ।

[2]अर्थात् तिमीले यूसुफलाई पनि साथमा लैजाँदाखेरि यसैप्रकार संरक्षणको वचन दिएका थियौ, तर जे-जति भयो, त्यो सामू छ, । अब तिमीलाई कुन प्रकार विश्वास गरूँ ?

[3]तैपनि अन्नको अत्याधिक आवश्यकता भए हुनाले भयको उपरान्त पनि बिनयामीनलाई साथमा पठाउनुबाट इन्कार उचित ठानेनन् तथा अल्लाहमाथि भरोसा गरेर त्यसलाई पठाउन तयार भइहाले ।

[4]अर्थात् राजाको यसप्रकारको सद्व्यवहारको उपरान्त कि उसले हाम्रो सेवा तथा सत्कार पनि राम्ररी गऱ्यो तथा हाम्रो पूँजी पनि फिर्ता गरिदियो । अन्य हामीलाई के चाहियो र ?

رُدَّتْ إِلَيْنَا ۖ وَنَمِيرُ أَهْلَنَا وَنَحْفَظُ أَخَانَا وَنَزْدَادُ كَيْلَ بَعِيرٍ ۖ ذَٰلِكَ كَيْلٌ يَسِيرٌ ﴿٦٥﴾

हाम्रो पूजी पनि फिर्ता गरिएको छ, तथा हामील आफ्नो परिवारको लागि अन्न (रसद) ल्याउनेछौं तथा आफ्नो भाईको सुरक्षा गर्नेछौं तथा एक ऊँटको नाप (भारी) अधिक ल्याउने छौं ।[1] यो नाप त अत्याधिक संरल छ ।[2]

قَالَ لَنْ أُرْسِلَهُ مَعَكُمْ حَتَّىٰ تُؤْتُونِ مَوْثِقًا مِّنَ اللَّهِ لَتَأْتُنَّنِي بِهِ إِلَّا أَن يُحَاطَ بِكُمْ ۖ فَلَمَّا آتَوْهُ مَوْثِقَهُمْ قَالَ اللَّهُ عَلَىٰ مَا نَقُولُ وَكِيلٌ ﴿٦٦﴾

(६६) (याकूबले) भने कि म त त्यसलाई कदापि तिम्रो साथमा पठाउने छैन जबसम्म तिमी अल्लाहलाई बीचमा राखेर मलाई वचन दिदैनौं कि तिमी त्यसलाई मेरो पासमा पुऱ्याइदिनेछौ त्यस अवस्थामा बाहेक यदि तिमी सबै बन्दी बनाइएका हुन्छौ ।[3] जब उनीहरूले पक्का वचन दिए त उनले भने कि हामी जे-जति भन्छौं अल्लाह त्यसको संरक्षक छ ।

وَقَالَ يَا بَنِيَّ لَا تَدْخُلُوا مِن بَابٍ وَاحِدٍ وَادْخُلُوا مِنْ أَبْوَابٍ

(६७) तथा (याकूबले) भने कि हे मेरा छोराहरू ! तिमी सबै एउटै ढोकाबाट नजानू बरू विभिन्न ढोकाहरूबाट अलग-अलग रूपले प्रवेश गर्नू ।[4]

[1]किनभने प्रति व्यक्ति, ऊँटले जति बोझ उचाल्न सक्थ्यो, त्यति अन्न दिइन्थ्यो, विनयामीनको कारण एउटा ऊँटको भारी पूँजी अधिक प्राप्त हुन्थ्यो ।

[2]यसको एउटा अभिप्राय त यो हो कि राजाको लागि एउटा ऊँटको भारी कुनै कठिन कार्य होइन, सरल हो । दोस्रो भावार्थ यो हो कि (ذلك) को संकेत त्यस खाद्यान्नतिर छ, जुन साथमा ल्याएका थिए तथा (يسير) को अर्थ थोरै मात्रा हो अर्थात् हामीले जुन खाद्यान्न ल्याएका छौं, त्यो थोरै मात्रामा छ, विनयामीन गएपछि हामीलाई अधिक खाद्यान्न प्राप्त हुनेछ, त यो राम्रै कुरा हो, हाम्रो आवश्यकता अधिक सुचारूरूपले पूर्ण हुनेछ ।

[3]अर्थात् तिमीलाई सामूहिक कठिनाई आइपर्छ अथवा तिमी सबै मर्छौ अथवा बन्दी बनाइन्छौ, जसबाट मुक्त हुन तिमी असमर्थ हुन्छौ, त्यो अन्य कुरा हो, त्यस स्थितिमा तिमी क्षम्य हुनेछौ ।

[4]जब विनयामीनसहित एघारह दाजु-भाईहरू मिस्र जानथाले त यो निर्देश दिनुभयो कि जब एउटै पिताका एघारह पुत्र जो शारीरिक उँचाई एवं आकारमा पनि श्रेष्ठ छन्, एकसाथ एउटै स्थान अथवा सँगसँगै कहींबाट गुज्रन्छन् त सामान्यत: उनीहरूलाई मानिसहरूले आश्चर्य तथा ईर्ष्याले हेर्छन् तथा यही कुरा आँखा लाग्नुको कारण बन्दछ । अत: उनीहरूलाई नराम्रो दृष्टिबाट बच्नको लागि उपायको रुपमा

مُّتَفَرِّقَةٍ ۖ وَمَآ أُغْنِى عَنكُم مِّنَ ٱللَّهِ مِن شَىْءٍ ۖ إِنِ ٱلْحُكْمُ إِلَّا لِلَّهِ ۖ عَلَيْهِ تَوَكَّلْتُ ۖ وَعَلَيْهِ فَلْيَتَوَكَّلِ ٱلْمُتَوَكِّلُونَ ۝٦٧

म अल्लाहको तर्फबाट कुनै कुरोलाई तिमीबाट रोक्न सक्दिन । आदेश मात्र अल्लाहकै चल्छ ।[1] मेरो पूर्ण विश्वास उसैमाथि छ तथा प्रत्येक भरोसा गर्नेले उसैमाथि भरोसा गर्नुपर्छ ।

وَلَمَّا دَخَلُوا۟ مِنْ حَيْثُ أَمَرَهُمْ أَبُوهُم مَّا كَانَ يُغْنِى عَنْهُم مِّنَ ٱللَّهِ مِن شَىْءٍ إِلَّا حَاجَةً فِى نَفْسِ يَعْقُوبَ قَضَىٰهَا ۚ وَإِنَّهُۥ

(६८) तथा जब उनीहरूले प्रवेश गरे, जसरी उनका पिताले उनीहरूलाई आदेश गरेका थिए–अल्लाहको तर्फबाट हुने कुनै कुरोलाई त्यसले उनीहरूबाट हटाउन सक्दैनथ्यो । हो, याकूबले आफ्नो मनको इच्छा पूरा गरे ।[2]

यो निर्देश दिए । आँखा लाग्नु सत्य हो, जस्तो कि नबी करीम सल्लल्लाहु अलैहि वसल्लमबाट पनि सहीह हदीसमा सिद्ध छ । जस्तै (العين حق) "आँखा लाग्नु सत्य हो ।" (सहीह बुखारी किताबुल तिब्ब, बाबुल ऐन हक्कुन तथा सहीह मुस्लिम किताबुस्सलात बाबुल तिब्बे वलमरजे वलरुकी) तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले नराम्रो दृष्टिबाट बाँच्नको लागि यो बिन्तीको वाक्य आफ्नो समुदायलाई भन्नुभएको छ । जस्तो भन्नुभयो कि जब तिमीलाई कुनै कुरा राम्रो लाग्छ भने (بارك الله) भन (मुअत्ता इमाम मालिक बाबुलवजुअे मिनल ऐन ताअलीकाते मिशकात अलबानी संख्या १२८६) जसको आँखा लागेको छ, उसलाई भनियोस् कि स्नान गर तथा त्यसको स्नानको यो पानी त्यस व्यक्तिको टाउको तथा शरीरमा हालियोस् जसलाई नजर लागेको हुन्छ । (वर्णित संकेत) यसैप्रकार ﴿مَا شَآءَ ٱللَّهُ لَا قُوَّةَ إِلَّا بِٱللَّهِ﴾ पढ्नु कुरआनबाट सिद्ध छ । (सूरः कहफ-३९) ﴿قُلْ أَعُوذُ بِرَبِّ ٱلْفَلَقِ﴾ तथा ﴿قُلْ أَعُوذُ بِرَبِّ ٱلنَّاسِ﴾ आँखा लागेकोमा पढेर फुक्नुपर्छ (जामेअ तिर्मिजी अबवाबुल तिब्बे, बाब माजाअ फिररुक्यः बिल मुअव्वजतैन)

[1]अर्थात् यो निर्देश प्रत्यक्ष साधनहरू तथा बचाव एवं उपायको रूपमा छ जसको प्रयोगका लागि मानवलाई आदेश दिइएको छ तर यसबाट अल्लाह तआलाद्वारा लेखिएको भाग्यमा कुनै परिवर्तन हुन सक्दैन । यसैको भाग्य लेखा अनुसार त्यो घटित हुनेछ ।

[2]अर्थात् यस उपायबाट अल्लाहको भाग्यलेखालाई हटाउन सकिदैन । तर आदरणीय याकूबले जुन (आँखा लाग्ने) भय थियो, त्यसको कारण उनले यस्तो भने ।

لَذُوْ عِلْمٍ لِّمَا عَلَّمْنٰهُ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٦٨﴾

नि:सन्देह त्यो ज्ञानवान थियो, किनभने हामीले उसलाई ज्ञान प्रदान गरेका थियौं, तर अधिकतर मानिसहरू जान्दैनन् ।[1]

وَلَمَّا دَخَلُوْا عَلٰى يُوْسُفَ اٰوٰٓى اِلَيْهِ اَخَاهُ قَالَ اِنِّيْٓ اَنَا اَخُوْكَ فَلَا تَبْتَئِسْ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿٦٩﴾

(६९) तथा जब यी सबै यूसुफका पासमा पुगे, त उसले आफ्नो भाईलाई आफ्नो निकट बसाई हाल्यो तथा भन्यो कि म तिम्रो दाई (यूसुफ) हुँ । अहिलेसम्म यिनीहरूले जे-जति गर्दै आइराखेका छन्, त्यसको चिन्ता नगर ।[2]

فَلَمَّا جَهَّزَهُمْ بِجَهَازِهِمْ جَعَلَ السِّقَايَةَ فِيْ رَحْلِ اَخِيْهِ ثُمَّ اَذَّنَ مُؤَذِّنٌ اَيَّتُهَا الْعِيْرُ اِنَّكُمْ لَسٰرِقُوْنَ ﴿٧٠﴾

(७०) अनि जब उनीहरूको सामान तयार गऱ्यो त आफ्नो भाईको सामानमा आफ्नो पानी पिउने प्याला[3] (कप) राखिदियो अनि एउटा पुकार्नेले ठूलो स्वरमा भन्यो, हे यात्री दल ![4] तिमीहरू त चोर हौ ।[5]

[1]अर्थात् यो उपाय अल्लाहको वह्यी (प्रकाशना) को प्रकाशमा थियो तथा यो विश्वास पनि कि (حذر) (बचाव व्यवस्था) भाग्यलाई बदल्न सक्दैन । अल्लाह तआलाद्वारा सिकाइएको ज्ञानमा आधारित थियो, जसबाट अधिकतर मानिसहरू अन्जान छन् ।

[2]केही व्याख्याकारहरू भन्दछन् कि दुई-दुई व्यक्तिहरूलाई एउटा-एउटा कोठामा बसालियो । यसप्रकार बिनयामीन एक्लै रहे, त यूसुफले उनलाई एक्लो एउटा कोठामा राखे तथा पछि एकान्तमा उनीसित कुरा गरे तथा उनलाई अघिका कुराहरू स्मरण गराएर भने कि यी दाजूहरूले मसँग जे-जति गरे, त्यसमाथि दुख नगर । केही व्याख्याकारहरू भन्छन् कि बिनयामीनलाई रोक्नको निम्ति जुन बहाना प्रयोग गरिएको थियो, त्यसबाट त्यसलाई परिचित गराइदिएका थिए ताकि त्यो दुखी नहोस् ।

[3]भनिन्छ कि यो (سقاية) (पानी पिउने भाँडा) स्वर्ण अथवा चाँदीको थियो, पानी पिउनको अतिरिक्त अनाज नाप्नुको पनि काम त्यसबाट लिइन्थ्यो । त्यसलाई गुप्तरूपले बिनयामीनको सामानमा राखियो ।

[4](العير) वास्तवमा ती ऊँट, गधा अथवा खच्चरहरूलाई भनिन्छ जसमाथि अन्न लादेर लगिन्छ । यहाँ तात्पर्य (أصحاب العير) अर्थात् यात्रा गर्ने यात्री हुन् ।

[5]चोरीको यो सम्बन्ध आफ्नो ठाउँमा उचित थियो किनभने पुकार्ने सेवक आदरणीय यूसुफको योजनाबाट अवगत थिएन, यसको अर्थ यो थियो कि तिम्रो हाल त चोरहरू जस्तो छ कि राजाको प्याला, राजाको इच्छाबिना तिम्रो सामग्री भित्र छ ।

قَالُوْا وَاَقْبَلُوْا عَلَيْهِمْ مَّاذَا تَفْقِدُوْنَ ۝٧١

(७१) उनीहरूले उनीतिर मुख फर्काएर भने, तिम्रो के कुरा हराएको छ ?

قَالُوْا نَفْقِدُ صُوَاعَ الْمَلِكِ وَلِمَنْ جَآءَ بِهٖ حِمْلُ بَعِيْرٍ وَّاَنَا بِهٖ زَعِيْمٌ ۝٧٢

(७२) उत्तर दिए कि राजकीय प्याला हराएको छ, जसले त्यो ल्याइदिन्छ त्यसलाई एउटा ऊटको भारी अन्न प्राप्त हुनेछ । त्यस वचनको म प्रतिभूत (जमानतदार) हुँ ।[1]

قَالُوْا تَاللّٰهِ لَقَدْ عَلِمْتُمْ مَّا جِئْنَا لِنُفْسِدَ فِى الْاَرْضِ وَمَا كُنَّا سٰرِقِيْنَ ۝٧٣

(७३) उनीहरूले भने, अल्लाहको सौगन्ध ! तिमीलाई राम्ररी ज्ञात छ कि हामी देशमा अशान्ति उत्पन्न गर्नका निम्ति आएका होइनौं तथा न त हामी चोर हौं ।[2]

قَالُوْا فَمَا جَزَآؤُهٗۤ اِنْ كُنْتُمْ كٰذِبِيْنَ ۝٧٤

(७४) उनीहरूले भने, यदि तिमीहरू झूटा सिद्ध भयौ भने त्यसको दण्ड के हो ?[3]

قَالُوْا جَزَآؤُهٗ مَنْ وُّجِدَ فِىْ رَحْلِهٖ فَهُوَ جَزَآؤُهٗ ؕ كَذٰلِكَ

(७५) उत्तर दिए कि यसको दण्ड यही हो कि जसको सामानमा त्यो पाइन्छ त्यसैलाई रोक्नु त्यसको

[1]अर्थात् म यस कुराको जमानत दिन्छु कि खोजभन्दा पूर्व यो व्यक्ति यस पिउने शाही कचौरा हामीलाई समर्पित गर्नेछ, त त्यसलाई उपहार अथवा मजदूरीको रूपमा यति खाद्यान्न दिइनेछ जति एउटा ऊँटले बोक्न सक्छ ।

[2]यूसुफका दाजूहरू यस योजनाबाट अनभिज्ञ थिए, जुन आदरणीय यूसुफले बनाएका थिए । यसकारण सौगन्ध खाएर उनीहरूले आफू चोर हुनेलाई तथा धर्तीमा आतङ्क उत्पन्न गर्नुबाट इन्कार गरे ।

[3]अर्थात् यदि तिम्रो सामानबाट त्यो शाही कचौरा पाइयो भने त्यसको के दण्ड हुनेछ ?

تَجْزِى الظّٰلِمِيْنَ ﴿٧٥﴾

दण्ड हो ।[१] हामी त अत्याचारीहरूलाई यस्तै दण्ड दिने गर्दछौं ।[२]

فَبَدَاَ بِاَوْعِيَتِهِمْ قَبْلَ وِعَآءِ اَخِيْهِ ثُمَّ اسْتَخْرَجَهَا مِنْ وِّعَآءِ اَخِيْهِ ؕ كَذٰلِكَ كِدْنَا لِيُوْسُفَ ؕ مَا كَانَ لِيَاْخُذَ اَخَاهُ فِيْ دِيْنِ الْمَلِكِ اِلَّآ اَنْ يَّشَآءَ اللّٰهُ ؕ نَرْفَعُ دَرَجٰتٍ مَّنْ نَّشَآءُ ؕ وَفَوْقَ كُلِّ ذِيْ عِلْمٍ عَلِيْمٌ ﴿٧٦﴾

(७६) तसर्थ (यूसुफले) आफ्नो भाईको सामान खोजीभन्दा पूर्व उनीहरूको सामानको खोजी प्रारम्भ गऱ्यो । अनि पछि उसले पिउने प्यालालाई आफ्नो भाईको सामान (थैलो) बाट झिक्यो ।[३] हामीले यूसुफका लागि यसरी यो योजना बनायौं ।[४] शाही कानून अनुसार त्यसले आफ्नो भाईलाई प्राप्त गर्न सक्दैनथ्या,[५] अल्लाहकै इच्छा लागू छ ।

---

[१]अर्थात् चोरलाई केही समयका लागि त्यस व्यक्तिलाई सुम्पिने गरिन्थ्यो, जसको सामान त्यसले चोरी गरेको हुन्थ्यो । यो आदरणीय याकूबको धर्म विधानमा दण्ड थियो, जसअनुसार यूसुफका दाजुहरूले यो दण्ड निर्धारित गरे ।

[२]यो कथन पनि यूसुफका दाजुहरूको हो । केही व्याख्याकारहरूका निकट यो कथन यूसुफका निकटवर्ती अधिकारीहरूको हो कि उनीहरूले भने कि हामी अत्याचारीहरू (अपराधी) लाई यसैप्रकार नै दण्ड दिन्छौं तर आयतको आगामी भाग कि "राजाको धर्ममा उनीहरू आफ्नो भाईलाई बन्दी बनाउन सक्दैनथे," यस कथनको खण्डन गर्दछ ।

[३]पहिला दाजुहरूको सामान खान-तलाशी गऱ्यो, अन्तमा बिनयामीनको सामान हेऱ्यो ताकि उनीहरूलाई यो सन्देह नहोस् कि यो तयार गरेको योजना हो ।

[४]अर्थात् हामीले वह्यी (प्रकाशना) द्वारा यूसुफलाई यो उपाय बतायौं । यसबाट ज्ञात हुन्छ कि कुनै उचित उद्देश्यको लागि यस्तो मार्ग अपनाउनु जसको प्रदर्शित अवस्था वहाना तथा योजनाको होस्, उचित छ, यदि त्यो विधि कुनै धार्मिक नियमका विरूद्ध हुँदैन । (फ़तहुल क़दीर)

[५]अर्थात् राजाको मिश्रमा जुन कानून तथा नियम प्रचलित थियो, त्यसका अनुसार बिनयामीनलाई रोक्न सम्भव थिएन । यसकारण उनले यात्रीहरूसित नै सोधे कि भन ! यस अपराधको दण्ड के हो ?

हामीले जसलाई चाहन्छौं, त्यसको पद उच्च गरिदिन्छौं।[1] प्रत्येक ज्ञानीमाथि एउटा प्रज्ञ (उच्च ज्ञानी) विद्यमान छ।[2]

قَالُوٓا إِن يَسْرِقْ فَقَدْ سَرَقَ أَخٌ لَّهُۥ مِن قَبْلُ ۚ فَأَسَرَّهَا يُوسُفُ فِى نَفْسِهِۦ وَلَمْ يُبْدِهَا لَهُمْ ۚ قَالَ أَنتُمْ شَرٌّ مَّكَانًا ۖ وَٱللَّهُ أَعْلَمُ بِمَا تَصِفُونَ ﴿٧٧﴾

(७७) उनीहरूले भनें कि यदि उसले चोरी गर्दछ भने (आश्चर्यको कुरो छैन) यसको दाजुले पनि अघि चोरी गरिसकेको छ।[3] यूसुफले यो कुरा आफ्नो मनमै राखे तथा उनीहरू समक्ष केही व्यक्त गरेनन्। उनले भने कि तिमी नराम्रो स्थानमा छौ,[4] तथा जे-जति वर्णन गरिराखेका छौ, त्यसलाई अल्लाह राम्ररी जान्दछ।

قَالُوا يَٰٓأَيُّهَا ٱلْعَزِيزُ إِنَّ لَهُۥٓ أَبًا شَيْخًا كَبِيرًا فَخُذْ أَحَدَنَا

(७८) उनीहरूले भने कि हे मिस्री अज़ीज![5] यसका पिता वयोबृद्ध व्यक्ति छन्। तपाईं यसको

---

[1]जुनप्रकार यूसुफको पद हामीले उच्च गऱ्यौं।

[2]अर्थात् प्रत्येक ज्ञानीभन्दा बढी कोही न कोही ज्ञानी हुन्छ, यसकारण कोही ज्ञानी यस गर्वमा न रहोस् कि म नै आफ्नो समयको श्रेष्ठ ज्ञानी हूँ। तथा केही व्याख्याकारहरू भन्दछन् कि यसको अर्थ हो कि प्रत्येक ज्ञानीमाथि सर्वज्ञाता अल्लाह तआला छ।

[3]यो उनीहरूले आफ्नो पवित्रता तथा सज्जनतालाई प्रदर्शित गर्नका निम्ति भने, किनभने यूसुफ तथा विनयामीन उनीहरूका साख्खै भाई थिएनन्, सौतेनी भाई। केही व्याख्याकारहरूले यूसुफको चोरीका लागि दुईटा गुप्त कुरा उद्धृत गरेका छन्, जुन कुनै प्रमाणित कथनमा आधारित छैन। उचित कुरा यही ज्ञान हुन्छ कि उनीहरूले आफूलाई त अत्याधिक प्रतिष्ठित तथा सूचारित सिद्ध गरे तथा यूसुफ तथा बिनयामीनलाई तुच्छ चरित्रका, तथा मित्थ्या वोल्दै उनीहरूलाई चोर तथा बेइमान सिद्ध गर्न प्रयत्न गरे।

[4]आदरणीय यूसुफको यस कथनवाट पनि ज्ञात हुन्छ कि उनीहरूले यूसुफसित चोरीलाई सम्वन्धित गरेर स्पष्टरूपले असत्य कथनको काम गरे।

[5]आदरणीय यूसुफलाई मिस्री अज़ीज त्यसकारण भनिएको छ कि त्यसबेला सम्पूर्ण वास्तविक अधिकार आदरणीय यूसुफसित थियो, राजा नाम मात्रको लागि राजाधिराज थियो।

مَكَانَهٗۚ اِنَّا نَرٰىكَ مِنَ الْمُحْسِنِيْنَ ﴿٧٨﴾

साटो हामीमध्ये कसैलाई लिनुस् । हामी देख्दछौं कि तपाईं बडो उपकारी व्यक्ति हुनुहुन्छ ।[1]

قَالَ مَعَاذَ اللّٰهِ اَنْ نَّاْخُذَ اِلَّا مَنْ وَّجَدْنَا مَتَاعَنَا عِنْدَهٗۤ ۙ اِنَّاۤ اِذًا لَّظٰلِمُوْنَ ﴿٧٩﴾

(७९) (यूसुफले) भने कि हामीले जसको पासमा आफ्नो वस्तु पाएका छौं, त्यसको अतिरिक्त अन्यलाई बन्दी बनाउनबाट अल्लाहको शरण चाहन्छौं, यस्तो गर्नुबाट हामी निःसन्देह अन्याय गर्नेहरूमध्येका हुनेछौं ।[2]

فَلَمَّا اسْتَيْـَٔسُوْا مِنْهُ خَلَصُوْا نَجِيًّا ؕ قَالَ كَبِيْرُهُمْ اَلَمْ تَعْلَمُوْۤا اَنَّ اَبَاكُمْ قَدْ اَخَذَ عَلَيْكُمْ مَّوْثِقًا مِّنَ اللّٰهِ وَمِنْ قَبْلُ مَا فَرَّطْتُّمْ فِيْ يُوْسُفَ ۚ فَلَنْ اَبْرَحَ الْاَرْضَ حَتّٰى يَاْذَنَ لِيْۤ اَبِيْۤ اَوْ يَحْكُمَ اللّٰهُ لِيْ ۚ وَهُوَ خَيْرُ الْحٰكِمِيْنَ ﴿٨٠﴾

(८०) जब यिनीहरू यसबाट निराश भए त एकान्तमा बसेर विचार-विमर्श गर्नथाले ।[3] उनीहरूमध्ये जो सबभन्दा ठूलो थियो, उसले भन्यो कि तिमीहरूलाई ज्ञात छैन कि तिम्रो पिताले तिमीसित अल्लाहलाई मध्यमा राखेर दृढ प्रतिज्ञा तथा वचन लिनु भएको छ तथा यसभन्दा पहिला तिमी यूसुफको विषयमा अपराध गरिसकेका छौ । अब त म यस धर्तीबाट हट्ने छैन, जवसम्म पिता स्वयं

[1]पिता त अवश्य वृद्ध थिए, तर यहाँ उनको मुख्य उद्देश्य बिनयामीनलाई मुक्त गराउनु थियो । उनका विचारमा त्यही यूसुफको कुरो रहयो कि हामीलाई पुनः बिनयामीन विना पिताको पासमा जान नपरोस् तथा पिताले हामीसित भनून् कि तिमीहरूले मेरो बिनयामीनलाई पनि यूसुफको जस्तै गुमाइदियौ । यसकारण यूसुफका उपकारहरूको वर्णन गरी यो कुरा गरे कि उनी संभवतः यो उपकार पनि गरून् कि बिनयामीनलाई छाडिदेउन् तथा त्यसको स्थानमा कुनै अन्य भाईलाई राखिहालून् ।

[2]यो उत्तर यसकारण दिए कि आदरणीय यूसुफको मूल उद्देश्य त बिनयामीनलाई नै रोक्नु थियो ।

[3]किनभने बिनयामीनलाई छाडेर जानु उनका लागि अत्यन्त कठिन थियो, उनीहरू पितालाई मुख देखाउन योग्य रहेका थिएनन् । यसकारण आपसमा विचार-विमर्श गर्नथाले कि अब हामीले के गर्ने ?

मलाई आज्ञा दिनुहुन्न ।[1] अथवा अल्लाह तआलाले मेरो यस समस्याको निर्णय गर्दछ, त्यो सर्वश्रेष्ठ निर्णायक हो ।[2]

ارْجِعُوٓا إِلَىٰٓ أَبِيكُمْ فَقُولُوا۟ يَـٰٓأَبَانَآ إِنَّ ٱبْنَكَ سَرَقَ وَمَا شَهِدْنَآ إِلَّا بِمَا عَلِمْنَا وَمَا كُنَّا لِلْغَيْبِ حَـٰفِظِينَ ﴿٨١﴾

(८१) तिमी सबै पिताजीको सेवामा फर्केर जाउ तथा भन कि हे पिताजी ! तपाईंको छोराले चोरी गऱ्यो तथा हामीले त्यही साक्ष्य दिएका थियौं, जुन हामी जान्दथ्यौं ।[3] हामी केही अप्रत्यक्षको सुरक्षा गर्नेहरू त थिएनौं ।[4]

وَسْـَٔلِ ٱلْقَرْيَةَ ٱلَّتِى كُنَّا فِيهَا وَٱلْعِيرَ ٱلَّتِىٓ أَقْبَلْنَا فِيهَا ۖ

(८२) तथा तपाईं ती नगरवासीहरूसित सोध्नुस्, जहाँ हामी थियौं तथा ती यात्रीहरूसित पनि सोध्नुस् ।

[1]त्यस ठूलो दाजुले यस परिस्थितिमा पिताको सामु जान आफूमा शक्ति तथा क्षमता पाएन त स्पष्ट भनिदियो कि म त यहाँबाट त्यसबेला सम्म जानेछैन, जबसम्म स्वयं पिताजी खोजी गरेर मेरो निर्दोष हुने कुरोलाई विश्वास गर्नुहुन्न तथा मलाई आउन आज्ञा दिनुहुन्न ।

[2]अल्लाह मेरो समस्याको निराकरण गरिदेओस् को अर्थ हो कि कुनै प्रकार (मिस्री अज़ीजले) विनयामीनलाई छाडिदेओस् तथा मसँग जानुको आज्ञा देओस् अथवा यो अर्थ हो कि अल्लाह तआला मलाई यति शक्ति प्रदान गरोस् कि म बिनयामीनलाई तलवार अथवा शक्तिले मुक्त गराएर आफ्नो साथमा लिएर जाउँ ।

[3]अर्थात् हामीले जुन वचन दिएका थियौं कि बिनयामीनलाई सकुशल फर्काएर ल्याउनेछौं, त यो हामीले आफ्नो ज्ञानको आधारमा गरेका थियौं, तदुपरान्त जुन घटना घटित भयो तथा जसको कारण बिनयामीनलाई हामीले छाड्नु पऱ्यो, यो हाम्रो वुद्धि तथा विचारमा पनि थिएन । दोस्रो अर्थ यो हो कि हामीले चोरीको जुन दण्ड वर्णित गरेका थियौं कि चोरलाई नै चोरीको सजायस्वरुप राखियोस्, त यो दण्ड हामीले आफ्नै ज्ञानको आधारमा निर्धारित गरेका थियौं, यसमा कुनै किसिमको नराम्रो विचार मिश्रित थिएन, तर यो घटना थियो कि जब सामग्रीमा खोजी गरियो त चोरिएको कचौरा बिनयामीनकै सामग्रीबाट निस्क्यो ।

[4]अर्थात् भविष्यमा घटित हुने घटनाबाट हामी अन्जान थियौं ।

وَإِنَّا لَصٰدِقُوْنَ ﴿٨٢﴾

जसका साथमा हामी आएका हौं तथा निःसन्देह हामी पूर्णरूपमा साँचो हौं ।[1]

قَالَ بَلْ سَوَّلَتْ لَكُمْ أَنْفُسُكُمْ أَمْرًا ۖ فَصَبْرٌ جَمِيْلٌ ۖ عَسَى اللّٰهُ أَنْ يَّأْتِيَنِيْ بِهِمْ جَمِيْعًا ۚ إِنَّهٗ هُوَ الْعَلِيْمُ الْحَكِيْمُ ﴿٨٣﴾

(८३) (याकूबले) भने त्यो त होइन बरु तिमीहरूले आफ्नो तर्फबाट कुरा बनाइहालेका छौ,[2] अतः धैर्य नै उत्तम छ । हुनसक्छ कि अल्लाह (तआला) ले अन्तमा ती सबैलाई मेरो पासमै पुऱ्याइदेओस् ।[3] त्यो सर्वज्ञ, अत्यन्त तत्वदर्शी छ तथा विज्ञानी हो ।

وَتَوَلّٰى عَنْهُمْ وَقَالَ يٰأَسَفٰى عَلٰى يُوْسُفَ وَابْيَضَّتْ عَيْنٰهُ مِنَ الْحُزْنِ فَهُوَ كَظِيْمٌ ﴿٨٤﴾

(८४) तथा पछि उनले उनीहरूबाट मुख फर्काए र भने हाय यूसुफ ![4] उनका आँखा शोकका कारण सेता भइहालेका थिए तथा उनी दुख, शोकलाई सहेर बसेका थिए ।

[1]नगरबाट तात्पर्य मिस्र हो जहाँ उनीहरूले अनाज लिन गएका थिए, अभिप्राय मिस्रवासी हुन् । यसैप्रकार (والعير) बाट तात्पर्य ( أصحاب العير ) अर्थात् यात्राका साथी हुन् । तपाईं मिस्र गई मिश्रवासीहरूसित तथा ती यात्रीहरूसित जोसँग यात्रा गरेर हामी आएका हौं, सोध्नुस् कि जे-जति हामीले वर्णन गरेका छौं, त्यो सत्य छ, यसमा असत्यको कुनै मिश्रण छैन ।

[2]आदरणीय याकूब वास्तविक दशाबाट पूर्णतः अनभिज्ञ थिए तथा अल्लाहले पनि वह्यी (प्रकाशना) द्वारा वास्तविक स्थिति भनेन । यसकारण उनले यही ठाने कि मेरा यी पुत्रहरूले जसरी यसबाट पूर्व यूसुफको विषयमा कुरा मनगढन्त रुपले रचेर वर्णन गरेका थिए, अब पुनः त्यसरी नै उनीहरूले आफ्नो तर्फबाट कुरा रचिहालेका छन् । बिनयामीनसँग उनीहरूले के गरे, त्यसको निश्चित ज्ञान आदरणीय याकूबसित थिएन, तर यूसुफको घटनाको आधारमा अनुमान गर्दै उनीहरूतिरबाट आदरणीय याकूबको हृदयमा शंका एवं सन्देह उचित थियो ।

[3]अब पुनः धैर्य बाहेक कुनै बाटो थिएन । तैपनि धैर्यका साथ आशाको पनि प्रत्याग गरेनन् । (جميعا) बाट तात्पर्य यूसुफ, बिनयामीन तथा ठूलो पुत्र हो, जो लज्जाको कारण त्यही मिस्रमा रोकिएको थियो कि या त पिताजीले मलाई यसै दशामा आउन आज्ञा देऊन् अथवा म कुनै प्रकारले बिनयामीनलाई आफूसँग लिएर आउनेछु ।

[4]अर्थात् यस नयाँ दुखले यूसुफको बिछोडको पुराना दुखलाई पनि नयाँ गरिदियो ।

[5]अर्थात् आँखाको कालिमा दुखको कारण सेतोपनामा परिवर्तित भइहालेको थियो ।

قَالُوا تَاللّٰهِ تَفْتَؤُا تَذْكُرُ يُوسُفَ حَتّٰى تَكُونَ حَرَضًا أَوْ تَكُونَ مِنَ الْهٰلِكِينَ ﴿٨٥﴾

(८५) (छोराहरूले) भने अल्लाहको सौगन्ध ! तपाईं सधैं यूसुफको स्मरणमा नै लीन रहनु हुनेछ यहाँसम्मकि गलेर जानुहुनेछ अथवा मरिहाल्नु हुनेछ ।[1]

قَالَ إِنَّمَا أَشْكُوا بَثِّي وَحُزْنِي إِلَى اللّٰهِ وَأَعْلَمُ مِنَ اللّٰهِ مَا لَا تَعْلَمُونَ ﴿٨٦﴾

(८६) उनले भने कि म त आफ्नो विपदा तथा दुखको गुहार अल्लाहसित गरिराखेको छु । मलाई अल्लाको तर्फबाट ती कुराको ज्ञान प्राप्त छ, जसबाट तिमी अनभिज्ञ छौ ।[2]

يٰبَنِيَّ اذْهَبُوا فَتَحَسَّسُوا مِنْ يُوسُفَ وَأَخِيهِ وَلَا تَايْـَٔسُوا مِنْ رَّوْحِ اللّٰهِ ۖ إِنَّهُ لَا يَايْـَٔسُ مِنْ رَّوْحِ اللّٰهِ إِلَّا الْقَوْمُ الْكٰفِرُونَ ﴿٨٧﴾

(८७) मेरा प्यारा छोराहरू ! तिमीहरू जाउ तथा यूसुफ र त्यसको भाईको बिषयमा राम्ररी पत्ता लगाऊ ।[3] तथा अल्लाको कृपाबाट निराश नहोऊ । नि:सन्देह अल्लाहको कृपाबाट तिनै निराश हुन्छन् जो काफ़िर हुन्छन् ।[4]

---

[1](حرض) त्यस शारीरिक विकार अथवा मानसिक दुर्बलतालाई भनिन्छ, जुन बुढेस प्रेम अथवा निरन्तर दुखका कारण मानिसलाई हुन्छ, यूसुफको वर्णनबाट दाजुहरूको द्वेषको आगो झन् तीव्र भइहाल्यो, तथा आफ्नो पितालाई यो भन्यो ।

[2]यसवाट तात्पर्य त त्यो स्वप्न हो, जसको विषयमा उनलाई पूर्ण विश्वास थियो कि अवश्य साकार हुनेछ तथा उनीहरू युसूफका समक्ष दण्डवत हुनेछन् अथवा उनको यो विश्वास थियो यूसुफ जीवित छन् तथा उनीसित जीवनमा अवश्य मिलन हुनेछ ।

[3]अत: त्यही विश्वासवाट प्रेरित भई उनले आफ्नो छोराहरूलाई यो आदेश दिए ।

﴿وَمَنْ يَقْنَطُ مِنْ رَّحْمَةِ رَبِّهِ إِلَّا الضَّالُّونَ﴾

"विचलित भएका मानिसहरू नै अल्लाहको दयाबाट निराश हुन्छन् ।" (सूर: अल-हज्र-५६)

यसको अर्थ यो हो कि ईमान भएकाहरूले कठिनभन्दा कठिन परिस्थितिहरूमा पनि धैर्य तथा संयमको तथा अल्लाहका असीम कृपाका आशाहरूलाई छाड्नु हुन्न ।

فَلَمَّا دَخَلُوا عَلَيْهِ قَالُوا يَا أَيُّهَا الْعَزِيزُ مَسَّنَا وَأَهْلَنَا الضُّرُّ وَجِئْنَا بِبِضَاعَةٍ مُزْجَاةٍ فَأَوْفِ لَنَا الْكَيْلَ وَتَصَدَّقْ عَلَيْنَا ۖ إِنَّ اللَّهَ يَجْزِي الْمُتَصَدِّقِينَ ﴿٨٨﴾

(८८) अनि यिनीहरू जब यूसुफ[1] को पासमा पुगे त भन्नलागे कि हे अज़ीज़ ! हामी तथा हाम्रो परिवार अत्याधिक कठिनाईमा छ। हामी अलिकति तुच्छ धन ल्याएका छौं ।[2] तर तपाईंले हामीलाई पूरा अन्नको नाप दिनुस्,[3] तथा हामीलाई दान गर्नुस्[4]. अल्लाह तआलाले दान गर्नेहरूलाई प्रतिफल दिन्छ ।

قَالَ هَلْ عَلِمْتُمْ مَا فَعَلْتُمْ بِيُوسُفَ وَأَخِيهِ إِذْ أَنْتُمْ جَاهِلُونَ ﴿٨٩﴾

(८९) (यूसुफले) भने कि तिमीहरूलाई थाहा पनि छ कि यूसुफ तथा त्यसको भाईसँग आफ्नो अज्ञानतावश के-के गऱ्यौ ?[5]

قَالُوا أَإِنَّكَ لَأَنْتَ يُوسُفُ ۖ قَالَ أَنَا

(९०) उनीहरूले भने कि (वास्तवमा) तिमी नै यूसुफ हौ ।[6] उत्तर दिए, हो, म नै यूसुफ हुँ।

[1]यो तेस्रो पटक उनीहरू मिस्र आएका थिए ।

[2]अर्थात् अनाज लिनको लागि हामी जुन मुल्य लिएर आएका छौं, त्यो अत्यन्त तुच्छ छ तथा थोरै छ ।

[3]अर्थात् हाम्रो सानो पूँजीलाई नहेर्नुस्, हामीलाई त्यसको साटोमा पूरा नाप दिनुस् ।

[4]अर्थात् हाम्रो कम पूँजी स्वीकार गरी हामीमाथि उपकार तथा दान गर्नुस् । तथा केही व्याख्याकारहरूले यसको अर्थ लेखेका छन् कि हाम्रो भाई बिनयामीनलाई स्वतन्त्र गरी हामीमाथि उपकार गर्नुस् ।

[5]जब उनीहरूले अत्यन्त नम्रतापूर्वक दान-पुण्य अथवा भाईको स्वतन्त्रताको अपील गरे त सँगै पिताको बृद्धा अवस्था, स्वास्थ्यको क्षीर्णता, छोराको वियोगलाई पनि वर्णन गरे, जसबाट यूसुफको हृदय संवेदनशील भयो, आँखामा अश्रु आयो तथा वास्तविकता प्रदर्शित गर्न बाध्य भए । तैपनि दाजुहरूको क्रुरताको वर्णनका साथमै नम्र चरित्रको पनि प्रदर्शन गरे कि यो काम तिमीले यस्तो अवस्थामा गऱ्यौ जब तिमी अशिक्षित तथा बुद्धिहीन थियौ ।

[6]दाजुहरूले जब मिस्री अधिकारीको मुखबाट त्यस यूसुफको वर्णन सुने, जसलाई उनीहरूले बाल्यकालमा कुरआनको एउटा अँध्यारो इनारमा फ्याँकिदिएका थिए, तब उनीहरू अचम्म परे तथा ध्यानपूर्वक हेर्न बाध्य पनि भए कि कहीं हामीसित सम्बोधक राजा, यूसुफ त होइन ? अन्यथा घटनाको ज्ञान उनलाई कसरी हुनसक्दछ ?

يُوسُفُ وَهٰذَآ أَخِي قَدْ مَنَّ اللّٰهُ عَلَيْنَآ ۖ إِنَّهُۥ مَن يَتَّقِ وَيَصْبِرْ فَإِنَّ اللّٰهَ لَا يُضِيعُ أَجْرَ الْمُحْسِنِينَ ﴿٩٠﴾

तथा यो मेरो भाई हो । अल्लाहले हामीमाथि कृपा तथा दया गऱ्यो । कुरो यो हो कि जो पनि परहेज़गारी तथा धैर्यसित रहन्छ, अल्लाह (तआला) कुनै पुण्य गर्नेहरूको प्रतिफल नष्ट गर्दैन ।[1]

قَالُوا تَاللّٰهِ لَقَدْ آثَرَكَ اللّٰهُ عَلَيْنَا وَإِن كُنَّا لَخَاطِئِينَ ﴿٩١﴾

(९१) उनीहरूले भने, अल्लाहको सौगन्ध ! कि अल्लाहले तिमीलाई हामीमाथि श्रेष्ठता प्रदान गरेको छ तथा यो पनि सत्य हो कि हामी अपराधी हौं ।[2]

قَالَ لَا تَثْرِيبَ عَلَيْكُمُ الْيَوْمَ ۖ يَغْفِرُ اللّٰهُ لَكُمْ ۖ وَهُوَ أَرْحَمُ الرَّاحِمِينَ ﴿٩٢﴾

(९२) उत्तर दिए, आज तिमीमाथि कुनै आरोप छैन ।[3] अल्लाहले तिमीहरूलाई क्षमा गरोस् । त्यो सबै दयावानहरूमध्ये दयानिधि छ ।

اذْهَبُوا بِقَمِيصِي هٰذَا فَأَلْقُوهُ عَلَىٰ وَجْهِ أَبِي يَأْتِ بَصِيرًا ۚ

(९३) मेरो यो कमिज तिमीहरू लग तथा मेरो पिताको मुखमा राखिदेउ ताकि उनले देख्न सकून् ।[4]

अत: उनीहरूले प्रश्न गरे कि के तिमी यूसुफ त होइनौ ?

[1]प्रश्नोत्तरमा स्वीकारको साथ अल्लाहको उपकारको वर्णन तथा धैर्य एवं संयमका राम्रा परिणामको पनि वर्णन गरेर बताइदिए कि तिमी मलाई मारिहाल्ने प्रयासमा कुनै कमी बाँकी राखेनौ । यो अल्लाह तआलाको दया तथा उपकार हो कि उसले न केवल ईनारवाट निकाल्यो वरु मिस्रको राज्य पनि प्रदान गऱ्यो तथा यो फल हो त्यस धैर्य तथा अल्लाहसित भय गर्नुको जसको सन्मति अल्लाहले मलाई प्रदान गऱ्यो ।

[2]दाजुहरूले जव यूसुफको प्रतिष्ठा देखे त आफ्ना त्रुटि तथा दोषहरूलाई स्वीकार गरिहाले ।

[3]आदरणीय यूसुफले पनि ईशदूतत्वको गरिमा दर्शाउँदै क्षमा गरेर भने कि जे भयो भईहाल्यो । आज तिम्रो कुनै भर्त्सना अथवा निन्दा गरिने छैन । मक्का विजयका दिन रसूल अल्लाह सल्लल्लाहु अलैहि वसल्लमले पनि ती काफ़िर तथा कुरैशका प्रमुखहरूलाई, जो उहाँका रक्त पिपासु थिए यिनै शब्दहरूलाई भनेर उनीहरूलाई क्षमा गरिदिनु भएको थियो । सल्लल्लाहु अलैहि वसल्लम ।

[4]कमीज़ अनुहार माथि पर्नाले आँखाको ज्योति पुन: आइहाल्नु, एउटा विचित्रता तथा चमत्कारको रुपमा थियो ।

وَأْتُونِي بِأَهْلِكُمْ أَجْمَعِينَ ﴿٩٣﴾

तथा आइहालून् एवं आफ्नो पूरा परिवार लाई मेरो पासमा ल्याऊ ।[1]

وَلَمَّا فَصَلَتِ الْعِيرُ قَالَ أَبُوهُمْ إِنِّي لَأَجِدُ رِيحَ يُوسُفَ لَوْلَا أَن تُفَنِّدُونِ ﴿٩٤﴾

(९४) तथा जब यो यात्री दल बिदा भयो त उनको पिताले भने कि मलाई यूसुफको सुगन्ध आइराखेको छ, यदि तिमीहरूले मलाई निर्बोध ठान्दैनौ ।[2]

قَالُوا تَاللَّهِ إِنَّكَ لَفِي ضَلَالِكَ الْقَدِيمِ ﴿٩٥﴾

(९५) उनीहरूले भने कि अल्लाहको सौगन्ध, तपाईं त आफ्नो त्यसै पुरानो त्रुटि[3] मा स्थिर हुनुहुन्छ ।

فَلَمَّا أَن جَاءَ الْبَشِيرُ أَلْقَاهُ عَلَىٰ وَجْهِهِ فَارْتَدَّ بَصِيرًا ۖ قَالَ

(९६) जब शुभ-सूचना दिनेले पुगेर उनको मुखमा कमीज़ राख्यो त्यसै क्षण उनी पुनः देख्नथाले ।[4] भने कि के म तिमीहरूसित

---

[1]यहाँ यूसुफले आफ्नो परिवारलाई आउन आमन्त्रण दिए ।

[2]उता त्यो कमीज़ लिएर यात्री मिस्रवाट हिंडे तथा यता आदरणीय याकूबलाई अल्लाह तआलाको तर्फबाट अद्‌भुत प्रकारले आदरणीय यूसुफको सुगन्ध आउन थाल्यो । यो मानौं यस कुराको घोषणा थियो कि अल्लाहका पैग़म्बर (ईशदूत) लाई पनि, जवसम्म अल्लाहतिरबाट ब्यवस्था तथा सूचना पुग्दैन, त पैग़म्बर अनभिज्ञ हुन्छ, चाहे छोरा आफ्नो नगरको कुनै इनारमा नै किन नहोस् तथा जब अल्लाहले प्रवन्ध गर्दछ, त मिस्र जस्तो दूरस्थ क्षेत्रबाट पनि पुत्रको सुगन्ध आइहाल्छ ।

[3] (ضلال) सित तात्पर्य प्रेम तथा प्यारको मुग्धता हो, जुन आदरणीय याकूबलाई आफ्नो पुत्र यूसुफसँग थियो । पुत्रहरूले भन्न थाले, अहिलेसम्म तपाईं त्यसै पुरानो (त्रुटि) मा अर्थात् यूसुफको प्रेममा लीन हुनुहुन्छ, यति दीर्घकाल समाप्त भए पश्चात पनि तपाईंको हृदयबाट यूसुफको प्रेम गएको छैन ।

[4]अर्थात् जब त्यो सूचना दिने व्यक्ति आयो तथा त्यो कमीज आदरणीय याकूबको अनुहारमा राख्यो, त त्यसबाट चमत्कारिक रूपमा उनको नयन ज्योति फेरि फर्केर आइहाल्यो ।

أَلَمْ أَقُلْ لَكُمْ إِنِّي أَعْلَمُ مِنَ اللَّهِ مَا لَا تَعْلَمُونَ ﴿٩٦﴾

भन्ने गर्दैनथ कि म अल्लाहतिरबाट यी कुरा जान्दछु, जुन तिमी जान्दैनौं ।[1]

قَالُوا يَا أَبَانَا اسْتَغْفِرْ لَنَا ذُنُوبَنَا إِنَّا كُنَّا خَاطِئِينَ ﴿٩٧﴾

(९७) उनीहरूले भने कि हे बुवा ! हजूरले हाम्रा पापहरूको क्षमा-याचना गर्नुस्, निःसन्देह हामी अपराधीं हौं ।

قَالَ سَوْفَ أَسْتَغْفِرُ لَكُمْ رَبِّي إِنَّهُ هُوَ الْغَفُورُ الرَّحِيمُ ﴿٩٨﴾

(९८) उनले भने, ठीक छ म शीघ्र नै तिम्रो लागि आफ्नो प्रभुसित क्षमाको याचना गर्नेछु ।[2] त्यो अत्याधिक क्षमाशील तथा अत्यन्त कृपालु छ ।

فَلَمَّا دَخَلُوا عَلَىٰ يُوسُفَ آوَىٰ إِلَيْهِ أَبَوَيْهِ وَقَالَ ادْخُلُوا مِصْرَ إِنْ شَاءَ اللَّهُ آمِنِينَ ﴿٩٩﴾

(९९) जब यो पूर्ण परिवार यूसुफ़को पासमा पुग्यो तब यूसुफ़ले आफ्ना माता-पितालाई आफ्नो नजीक स्थान दिए ।[3] तथा भने कि अल्लाहलाई स्वीकार छ भने तपाईं सबै सुख-शान्तिले मिस्रमा आइहाल्नुस् ।

وَرَفَعَ أَبَوَيْهِ عَلَى الْعَرْشِ وَخَرُّوا

(१००) तथा आफ्नो सिंहासनमा आफ्ना माता-पितालाई उच्च स्थानमा बसाल्यो तथा सबै

[1]किनभने मेरो पासमा ज्ञानको एउटा साधन वह्यी (प्रकाशना) पनि छ, जुन तिमीहरूमध्ये कोहीसित छैन । यस वह्यी (प्रकाशना) द्वारा अल्लाह तआला आफ्ना पैग़म्बरहरूलाई विभिन्न अवस्था बारे आवश्यकता अनुसार तथा कारणवश गर्दैरहन्छ ।

[2]तुरुन्त क्षमा-याचना नगरी क्षमा-याचनाको वचन दिए । उद्देश्य यो थियो कि रातिको अन्तिम समयमा, जुन अल्लाहका विशेष भक्तहरूको अल्लाहको पूजा गर्नुको विशेष समय हुन्छ, अल्लाहसित उनीहरूको क्षमाको लागि प्रार्थना गर्नेछु ।

[3]अर्थात् आदर सम्मानका साथ उनीहरूलाई आफ्ना नजीकमा स्थान दिए तथा उनको निकै सत्कार गरे ।

[4]केही व्याख्याकारहरूको विचार छ कि यो सौते आमा तथा साखै मौसी (आमाकी दिदी-बहिनी), किनभने यूसुफ़की माताको बिनयामीनको जन्म पश्चात देहान्त भइहालेको थियो, आदरणीय याकूबले उनको देहान्त पश्चात उनकी बहिनीसँग विवाह गरेका थिए । यही मौसी (सानी आमा) अब आदरणीय याकूबका साथ

لَهُ سُجَّدًاۚ وَقَالَ يَٰٓأَبَتِ هَٰذَا تَأْوِيلُ رُءْيَٰىَ مِن قَبْلُ قَدْ جَعَلَهَا رَبِّى حَقًّاۖ وَقَدْ أَحْسَنَ بِىٓ إِذْ أَخْرَجَنِى مِنَ ٱلسِّجْنِ وَجَآءَ بِكُم مِّنَ ٱلْبَدْوِ مِنۢ بَعْدِ أَن نَّزَغَ ٱلشَّيْطَٰنُ بَيْنِى وَبَيْنَ إِخْوَتِىٓۚ إِنَّ رَبِّى لَطِيفٌ لِّمَا يَشَآءُۚ إِنَّهُۥ هُوَ ٱلْعَلِيمُ ٱلْحَكِيمُ ﴿١٠٠﴾

यसको समक्ष दण्डवत भए[१] तथा त्यसपछि भन्यो पिताजी ! यो मेरो प्रथम स्वप्नको फल हो ।[२] मेरो प्रभुले त्यसलाई साकार गरेर देखायो । त्यसले मसँग बडो उपकार गऱ्यो जबकि मलाई कारागार[३] बाट निकाल्यो तथा तपाईंहरूलाई रेगिस्तान (मरूस्थल) बाट[४] ल्यायो, त्यस मतभेद पश्चात जुन शैतानले म तथा मेरो दाजुहरू बीच पारेको थियो ।[५] मेरो प्रभुले जे चाहन्छ, त्यसको लागि राम्रो व्यवस्था गर्दछ तथा सर्वज्ञाता विज्ञानी छ ।

मिस्र गएकी थिइन् । (फ़तहुल क़दीर) तर इमाम इब्ने ज़रीर तबरीले यसको विपरीत यो भनेका छन् कि यूसुफ़की माताको देहान्त भएको थिएन तथा तिनै साखै माता साथमा थिइन् । (इब्ने कसीर)

[१]केहीले यसको अनुवाद यो गरेका छन् कि मान-सम्मानको लागि यूसुफ़ समक्ष नत्मस्तक भए तर (وَخَرُّوا لَهُ سُجَّدًا) का शव्दहरू भन्दछन् कि उनी धर्तीमा यूसुफ़ समक्ष निधारले टेकेर ढोके । यो सजद: (दण्डवत) निधार टेक्नुको अर्थमा छ । तैपनि यो सजद: सम्मानको लागि छ, बन्दनाको रुपमा थिएन तथा सम्मान सूचक सजद: आदरणीय याक़ूबको धर्म-विधानमा वैध थियो । इस्लाममा शिर्क (मिश्रण) लाई रोक्नको निम्ति आदर-सम्मानको लागि सजद: गर्नु अवैध गरियो, तथा अब सम्मान स्वरुप कसैलाई सजद: गर्नु पनि वर्जित छ ।

[२]अर्थात् आदरणीय यूसुफ़ले जुन स्वप्न देखेका थिए, यति परीक्षाहरूलाई पार गरे पश्चात अन्ततः त्यसको यो फल अगाडी आयो कि अल्लाह तआलाले आदरणीय यूसुफ़लाई राजसिंहासनमा बसाल्यो तथा माता-पितासहित सबै दाजुहरूले उनलाई दण्डवत् गरे ।

[३]अल्लाहको उपकारमा इनारबाट निस्कनुको चर्चा गरेनन् ताकि दाजुहरू लज्जित नहोऊन् । यो नवी (ईशदूत) को आचरण हो ।

[४]मिस्र जस्तो विकसित क्षेत्रको अपेक्षा किनआनको स्थान एउटा मरुस्थलको जस्तो थियो, यसैकारण त्यसलाई (بَدْوٌ) शव्दले वर्णित गरे ।

[५]यो पनि एउटा दयापूर्ण आचरणको नमूना हो कि दाजुहरूमाथि अलिकति पनि आक्षेप लगाएनन् तथा शैतानलाई यस कारवाहीको कारण ठहराए ।

رَبِّ قَدْ اٰتَيْتَنِيْ مِنَ الْمُلْكِ وَعَلَّمْتَنِيْ مِنْ تَاْوِيْلِ الْاَحَادِيْثِ ۚ فَاطِرَ السَّمٰوٰتِ وَالْاَرْضِ ۣ اَنْتَ وَلِيّٖ فِي الدُّنْيَا وَالْاٰخِرَةِ ۚ تَوَفَّنِيْ مُسْلِمًا وَّاَلْحِقْنِيْ بِالصّٰلِحِيْنَ ﴿١٠١﴾

(१०१) हे मेरा प्रभु ! तिमीले मलाई राज्य प्रदान गर्‍यौ ।[१] तथा मलाई स्वप्नहरूका अर्थको ज्ञान दियौ[२] । हे आकाशहरू तथा धर्तीका स्रष्टा ! तिमी नै संसार तथा आखिरतमा मेरो संरक्षक तथा सहायक हौ, तिमीले मलाई मुसलमान भएकै अवस्थामा मार्नू तथा पुण्य गर्नेवालाहरूमा सम्मिलित गरिदेउ ।[३]

ذٰلِكَ مِنْ اَنْۢبَآءِ الْغَيْبِ نُوْحِيْهِ اِلَيْكَ ۚ وَمَا كُنْتَ لَدَيْهِمْ اِذْ اَجْمَعُوْٓا اَمْرَهُمْ وَهُمْ يَمْكُرُوْنَ ﴿١٠٢﴾

(१०२) यो परोक्षका सूचनाहरूमध्ये हो, जसको हामीले तपाईंतिर वह्यी (प्रकाशना) गरिराखेका छौं । त तपाईं उनको पासमा हुनुहुन्नथ्यो जबकि उनीहरूले आफ्नो कुरामा अठोट लिइसकेका थिए तथा उनीहरू छल तथा कपट गर्न थालेका थिए ।[४]

[१]अर्थात् मिस्रको राज्य प्रदान गर्‍यो, जस्तो कि विस्तृत वर्णन भइसकेको छ ।

[२]आदरणीय यूसुफ अल्लाहका पैग़म्बर थिए जसमाथि अल्लाहको तर्फबाट प्रकाशना अवतरण हुन्थ्यो तथा विशेष तथा मुख्य कुराहरूको ज्ञान उनलाई दिइन्थ्यो । अतः यस नबूअतको ज्ञानको प्रकाशमा पैग़म्बरले स्वप्नहरूको फल पनि ठीक-ठीक निकाल्ने गर्दथे । तैपनि स्वप्न फल निकाल्नुको यो योग्यता अल्लाह (परमेश्वर) अहिले पनि कसैलाई प्रदान गरिदिन्छ ।

[३]अल्लाह तआलाले आदरणीय यूसुफमाथि जुन उपकार गरे तिनलाई स्मरण गरी तथा अल्लाह तआलाका अन्य गुणहरूको वर्णन गरेर प्रार्थना गरिराखेका छन् कि जब मलाई मृत्यु आउँछ त इस्लामको अवस्थामा आओस् तथा मलाई सज्जन (पुनीत) पुरूषहरूका साथ सम्मिलित गरिदेउ । यसबाट तात्पर्य आदरणीय यूसुफ़का पूर्वज आदरणीय इब्राहीम तथा इसहाक़ आदि हुन्, केही व्यक्तिहरूलाई यस प्रार्थनाबाट यो शंका उत्पन्न भयो कि आदरणीय यूसुफ़ले मृत्युको प्रार्थना गरे । यद्यपि यो मृत्युको प्रार्थना होइन, अन्तिम क्षणसम्म इस्लाममा दृढ रहनुको प्रार्थना हो ।

[४]अर्थात् यूसुफ़सँग जबकि उनलाई इनारमा हालेर आए अथवा तात्पर्य आदरणीय याक़ूब हुन् अर्थात् उनलाई यो भनेर कि यूसुफलाई ब्वाँसोले खाइहालेको छ तथा यो त्यसको कमीज़ हो, जुन रक्तरन्जित छ, उनीसँग छल गरियो । अल्लाह तआलाले यस स्थानमा यस कुराको खण्डन गरेको छ कि नबी करीम सल्लल्लाहु अलैहि वसल्लमलाई परोक्षको ज्ञान थियो । तर यो खण्डन साधारण ज्ञानको होइन किनभने अल्लाह तआलाले उहाँलाई प्रकाशनाद्वारा अवगत गरायो ।

وَمَآ أَكۡثَرُ ٱلنَّاسِ وَلَوۡ حَرَصۡتَ بِمُؤۡمِنِينَ ١٠٣

(१०३) यद्यपि तपाईंले जति चाहे पनि अधिकतर मानिसहरू ईमान्दार हुने छैनन् ।[1]

وَمَا تَسۡـَٔلُهُمۡ عَلَيۡهِ مِنۡ أَجۡرٍۚ إِنۡ هُوَ إِلَّا ذِكۡرٌ لِّلۡعَٰلَمِينَ ١٠٤

(१०४) तथा तपाईं उनीहरूसित यसको लागि कुनै ज्याला मागिराख्नु भएको छैन ।[2] यो त समस्त संसारको लागि सम्पूर्ण शिक्षा नै हो ।[3]

وَكَأَيِّن مِّنۡ ءَايَةٍ فِي ٱلسَّمَٰوَٰتِ وَٱلۡأَرۡضِ يَمُرُّونَ عَلَيۡهَا وَهُمۡ

(१०५) तथा आकाशहरू तथा धर्तीमा कैयन् प्रतीक छन्, जसबाट यिनी मुख फर्काएर

यो खण्डन प्रत्यक्ष दर्शनको हो कि त्यसबेला तपाईं त्यहाँ उपस्थित हुनु हुन्नथ्यो । यसैप्रकार यस्ता मानिसहरूसित तपाईंको सम्बन्ध तथा सम्पर्क रहेको छैन जसबाट तपाईंले सुन्नु भएको छ, यो केवल अल्लाह तआला नै हो जसले तपाईंलाई यस अनदेखि घटनाको सूचना दिएको छ, जुन यस कुराको प्रमाण हो कि तपाईं अल्लाहको साँचो नबी हुनुहुन्छ तथा अल्लाह तआलाको तर्फबाट तपाईंमाथि प्रकाशना अवतरित हुन्छ । अल्लाह तआलाले अन्य पनि कैयन् स्थानहरूमा यसैप्रकार अन्तज्ञानी तथा परोक्षज्ञ हुनुको खण्डन गरेको छ । जस्तो, हेर्नुस् सूरः आले-इमरान-७ तथा ४४, अल-कसस-४५ तथा ४६, सूरः स्वाद-६९ तथा ७० ।

[1]अर्थात् अल्लाह तआलाले तपाईंलाई पूर्वकालिक घटनाहरूबाट अवगत गराइराखेको छ ताकि मानिसहरू तिनीबाट शिक्षा ग्रहण गरुन् तथा अल्लाहका पैगम्बरहरू (ईशदूतहरू) को मार्गको अनुसरण गरुन् तथा सफलताका अधिकारी बनुन् तर यस उपरान्त पनि मानिसहरूको अधिकतर संख्या ईमान स्थापित गर्नेहरूको छैन किनभने उनीहरू विगतका समुदायहरूका घटना सुन्न त सुन्छन्, तर शिक्षा प्राप्त गर्नको लागि होइन मात्र मनोरञ्जन तथा आनन्दको लागि । अतः उनीहरू ईमानबाट बञ्चित रहन्छन् ।

[2]कि जसबाट उनीहरूलाई यो शंका होस् कि यो नबूअतको दाबी त मात्र धन एकत्रित गर्नुको बहाना हो ।

[3]ताकि मानिसहरू यसबाट शिक्षा प्राप्त गरुन् तथा आफ्ना यो लोक तथा परलोक सिंगारुन् । अब संसारका मानिसहरू यसबाट दृष्टि फर्काउन्छन् तथा यसबाट शिक्षा प्राप्त गर्दैनन् भने मानिसहरूको त्रुटि हो तथा उनको दुर्भाग्य हो, कुरआन त वास्तवमा संसारका मानिसहरूका लागि संमार्ग तथा शिक्षाकै लागि आएको छ ।

عَنْهَا مُعْرِضُوْنَ ﴿١٠٥﴾

हिंडिहाल्छन् ।[1]

وَمَا يُؤْمِنُ اَكْثَرُهُمْ بِاللّٰهِ اِلَّا وَهُمْ مُّشْرِكُوْنَ ﴿١٠٦﴾

(१०६) तथा उनीहरूमध्ये अधिकतर मानिसहरू अल्लाहमाथि ईमान भए उपरान्त पनि मुशिरक नै छन् ।[2]

اَفَاَمِنُوْٓا اَنْ تَاْتِيَهُمْ غَاشِيَةٌ مِّنْ عَذَابِ اللّٰهِ اَوْ تَاْتِيَهُمُ السَّاعَةُ بَغْتَةً وَّهُمْ لَا يَشْعُرُوْنَ ﴿١٠٧﴾

(१०७) के तिनीहरू यस कुराबाट निर्भय भइसकेका छन् कि उनको पासमा अल्लाहका प्रकोपहरूबाट कुनै सामान्य प्रकोप आउनसक्छ अथवा उनीमाथि एक्कासि क़ेयामतको बज्रपात हुन सक्छन् तथा उनी अचेत हुन सक्छन् ।

قُلْ هٰذِهٖ سَبِيْلِيْٓ اَدْعُوْٓا اِلَى اللّٰهِ ۣ عَلٰي بَصِيْرَةٍ اَنَا وَمَنِ اتَّبَعَنِيْ ۭ وَسُبْحٰنَ اللّٰهِ وَمَآ اَنَا مِنَ الْمُشْرِكِيْنَ ﴿١٠٨﴾

(१०८) (तपाईं) भनिदिनुस्, मेरो यही बाटो हो म तथा मेरा अनुयायी अल्लाहतिर आमन्त्रित गरिराखेका छन्, पूर्ण विश्वास तथा निश्चितताका उपरान्त[3] तथा अल्लाह पवित्र

[1]आकाशहरू तथा धर्तीको उत्पत्ति तथा उनीहरूमा असंख्य कुराहरूको अस्तित्व यस कुराको प्रमाण हो कि एउटा स्रष्टा तथा रचयिता छ । जसले यी कुराहरूलाई वनाएको छ तथा एक नियोजक त्यही हो, जसले उनीहरूको यस्तो प्रवन्ध गरिराखेको छ कि आदिकालदेखि यो प्रवन्ध चलिआइराखेको छ तर यिनीहरूमा कहिल्यै आपसमा जुधाई तथा दुर्घटना भएको छैन तर मानिसहरू यी कुराहरूलाई हेर्दै यत्तिकै हिंडिहाल्छन्, यिनीमाथि विचार गर्दैनन् तथा न यिनीबाट प्रभुको परिचय प्राप्त गर्दछन् ।

[2]यो त्यो वास्तविकता हो, जसलाई क़ुरआनले विभिन्न स्थानहरूमा स्पष्टताका साथ वर्णन गरेको छ कि यी मूर्तिपूजक यो स्वीकार गर्दछन् कि आकाश तथा धर्तीको स्रष्टा, स्वामी, पोषक तथा सञ्चालक मात्र अल्लाह तआ़ला नै छ । परन्तु यस उपरान्त पूजामा अल्लाहसँग अन्यलाई पनि सम्मिलित गर्छन् तथा यसप्रकार अधिकतर मानिसहरू मुशिरक (वहुदेववादी) छन् । अर्थात् प्रत्येक युगका मानिसहरू तौहीद, उपासना (पूजा) लाई मान्न तयार हुँदैनन् । आजका समाधिपूजकहरूको पूजा, गुणहरूका अधिकारी ठानेर उनीहरूलाई सहायताको निम्ति गुहार्दछन् पनि तथा पूजाका कैयन् रीतिहरू पनि अपनाउँछन् ।

[3]अर्थात् यो तौहीद (एकेश्वरवाद) को मार्ग नै मेरो मार्ग हो, वरु प्रत्येक पैग़म्बरको यही मार्ग रहेको छ, यसैतिर म तथा मेरा अनुयायी दृढ विश्वासका साथ धार्मिक नियमहरूका प्रमाणका साथ मानिसहरूलाई आमन्त्रित गर्दछौं ।

छ[1] तथा म मूर्तिपूजकहरू (मिश्रणवादीहरू) मध्ये होइन ।

(१०९) तथा तपाईंभन्दा अघि हामीले वस्तीका वासिन्दाहरूतिर जति पनि रसूल पठाएका छौं सबै पुरूष नै थिए, जसलाई हामीले वह्‌यी (प्रकाशना) अवतरित गर्दैरहयौं ।[2] के धर्तीमा हिंडडुल गरी उनीहरूले देखेनन् कि उनीभन्दा अघिका मानिसहरूको कस्तो परिणाम भयो ? नि:सन्देह आखिरतको घर परहेजगारहरू (संयमीहरू) का लागि अति उत्तम छ, के तिमी तैपनि बुझ्दैनौ ?

وَمَآ اَرْسَلْنَا مِنْ قَبْلِكَ اِلَّا رِجَالًا نُّوْحِيْٓ اِلَيْهِمْ مِّنْ اَهْلِ الْقُرٰى ؕ اَفَلَمْ يَسِيْرُوْا فِي الْاَرْضِ فَيَنْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ؕ وَلَدَارُ الْاٰخِرَةِ خَيْرٌ لِّلَّذِيْنَ اتَّقَوْا ؕ اَفَلَا تَعْقِلُوْنَ ⑩⑨

(११०) यहाँसम्मकि जब रसूल निराश हुनलागे[3] तथा समुदायका मानिसहरूले यो विचार गर्नथाले कि उनीहरूलाई (असत्य) भनियो ।[4] तुरुन्तै हाम्रो

حَتّٰٓى اِذَا اسْتَيْـَٔسَ الرُّسُلُ وَ ظَنُّوْٓا اَنَّهُمْ قَدْ كُذِبُوْا جَآءَهُمْ

[1]अर्थात् म शुद्धता तथा पवित्रताको वर्णन गरिराखेको छु यस कुराबाट कि त्यसको कोही साझेदार, समतुल्य, प्रतिमा अथवा मन्त्री तथा सल्लाहकार अथवा सन्तान तथा पत्नी छैन । त्यो यी सबै कुराहरूबाट पवित्र छ ।

[2]यो आयत यस कुराको प्रमाण हो कि सबै नबी पुरूषहरू भएका छन्, स्त्रीहरूबाट कसैलाई पनि नबूअतको पद प्राप्त भएन, यसैप्रकार उनका सम्बन्ध नगरहरूसित थियो, उनीहरूमा कोही पनि ग्रामीण (ग्रामवासीहरू) मध्ये थिएन, किनभने ग्रामीण तथा देहाती नगरवासीहरूको अपेक्षा स्वभाविक रूपले कठोर तथा व्यवहारमा कटु हुन्छन् तथा नगरवासी उनको अपेक्षा कोमल, सरल तथा सभ्य हुन्छन् तथा यी विशेषताहरू नबूवतका लागि आवश्यक छन् ।

[3]यो निराशा आफ्नो समुदायवाट ईमान स्थापित न गर्नुका कारण भयो ।

[4]अर्थात् यी पैग़म्वरहरूका अनुयायीका हृदयमा यो शंका उत्पन्न हुन लाग्यो कि उनीसित यसै यातनाको झूठो वाचा गरिएको छ, यातना सम्भवत: आउने नै छैन । ध्यान रहोस् कि मात्र यसप्रकारको शंका उत्पन्न हुनु ईमानका विरूद्ध छैन । केहीले (ظنوا) को कर्ता समुदाय अर्थात काफ़िरहरूलाई भनेका छन् अर्थात काफ़िरहरू यातनाको चेतावनीमा पहिला त भयभीत भए तर जब अधिक वेर हुनथाल्यो त विचार गरे कि यातना त आउँदै आउँदैन (जस्तो कि पैग़म्बरको तर्फबाट दावी भइराखेको छ) तथा न आइराखेको देखिन्छ, प्रतीत हुन्छ कि नबीहरूसित पनि यसै झूठो वचन दिइएको छ । तात्पर्य नबी

نَصْرُنَا ۙ فَنُجِّيَ مَن نَّشَاءُ ۖ وَلَا يُرَدُّ بَأْسُنَا عَنِ الْقَوْمِ الْمُجْرِمِينَ ﴿١١٠﴾

सहायता उनलाई आइपुग्यो[1] जसलाई हामीले चाहयौं, त्यसलाई मुक्ति प्रदान गर्‍यौं ।[2] कुरो यो हो कि हाम्रो प्रकोप पापीहरूबाट फर्काइँदैन ।

لَقَدْ كَانَ فِي قَصَصِهِمْ عِبْرَةٌ لِّأُولِي الْأَلْبَابِ ۗ مَا كَانَ حَدِيثًا يُفْتَرَىٰ وَلَٰكِن تَصْدِيقَ الَّذِي بَيْنَ يَدَيْهِ وَتَفْصِيلَ كُلِّ شَيْءٍ وَهُدًى وَرَحْمَةً لِّقَوْمٍ يُؤْمِنُونَ ﴿١١١﴾

(१११) यिनका कथाहरूमा बुद्धिमानीहरूका लागि निःसन्देह शिक्षा तथा चेतावनी छ, यो कुरआन असत्यले रचिएको कुरो होइन, बरु यो युक्तिशास्त्र हो, ती किताबहरूका लागि जुन यसभन्दा अघिका छन् । तथा प्रत्येक वस्तुको सविस्तार वर्णन एवं मार्ग-दर्शन तथा कृपा हो निष्ठावानहरूका लागि ।[3]

करीम सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिनु हो कि तपाईंको समुदायमाथि यातनामा जुन विलम्ब भइराखेको छ, त्यसबाट आत्तिनुपर्ने आवश्यकता छैन । प्राचीन कालका समुदायहरूमाथि पनि यातनामा विलम्ब गरिएको थियो तथा अल्लाहको तर्फबाट त्यसको चाहत तथा ज्ञान अनुसार उनीहरूलाई अत्याधिक समय प्रदान गरियो । यहाँसम्मकि रसूल आफ्नो समुदायका ईमानबाट निराश भए तथा मानिसहरूले यो विचार गर्नथाले कि शायद उहाँलाई यातनाको यसै असत्य भनिएको छ ।

[1]जब उनको निराशा यस भयानक शंका तथा सन्देहसम्म पुग्यो त तुरुन्त हाम्रो सहायता उनको पासमा पुग्यो तथा उनका हृदयमा शंकाका काँडा निस्किहाले । यसमा वास्तवमा अल्लाह तआलाको त्यस अवसर दिनुको नीतिको वर्णन छ, जुन त्यो अवज्ञाकारीहरूलाई दिन्छ, यहाँसम्मकि यस विषयमा त्यसले आफ्नो पैगम्बरको इच्छाको विपरीत पनि अधिकभन्दा अधिक समय प्रदान गर्दछ, शीघ्रता गर्दैन, यहाँसम्मकि कैयन् पटक पैगम्बरहरूका अनुयायी पनि यातनाबाट निराश भएर यो बुझ्न थाल्छन् कि उनीसित यसै मिथ्यावचन गरिएको छ ।

[2]यी मुक्ति प्राप्त गर्ने निष्ठावान नै हुन्थे ।

[3]अर्थात् यो कुरआन जसमा यूसुफको कथा तथा अन्य समुदायहरूको घटनाको वर्णन छ, कुनै मनगढन्त कुरा होइन, बरु यो अघिका किताबहरूको पुष्टि गर्दछ तथा त्यसमा धर्मको विषयमा सबै आवश्यक कुराहरूको विस्तृत विवरण छ तथा ईमानवालाहरूको लागि सन्मार्ग तथा कृपा हो ।

# सूरतु-रअ्द-१३

سُوْرَةُ الرَّعْدِ

सूर: अल-रअ्द मदीनामा उत्रेको तथा यसमा ४३ आयतहरू एवं ६ रूकूअ छन्।

शुरु गर्दछु अल्लाहको नामबाट जो अत्यन्त कृपालु एवं अत्यन्त दयालु छ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ○

(१) अलिफ़. लाम. मीम. रा. । यी कुर्आनका आयतहरू हुन् तथा जे-जति तपाईंतिर तपाईंको प्रभुको तर्फबाट अवतरित गरिएको छ, सबै सत्य छ। तर अधिकतर मानिसहरू ईमान (विश्वास) स्थापित गर्दैनन्।

الٓمّٓرٰ تِلْكَ اٰيٰتُ الْكِتٰبِ ؕ وَالَّذِيْٓ اُنْزِلَ اِلَيْكَ مِنْ رَّبِّكَ الْحَقُّ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يُؤْمِنُوْنَ ①

(२) अल्लाह त्यो हो जसले आकाशहरूलाई बिना स्तम्भ उच्च राखेको छ जुन कि तिमी त्यसलाई देखिराखेका छौ। अनि त्यो (अल्लाह) अर्श (सिंहासन) मा स्थिर छ,[1] उसैले सूर्य तथा चन्द्रमालाई आधीन बनाइराखेको छ। प्रत्येक एउटा निर्धारित समयसम्म चलिराखेको छ।[2] त्यही कार्यको व्यवस्था गर्दछ, त्यसले

اَللّٰهُ الَّذِيْ رَفَعَ السَّمٰوٰتِ بِغَيْرِ عَمَدٍ تَرَوْنَهَا ثُمَّ اسْتَوٰى عَلَى الْعَرْشِ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ ؕ كُلٌّ يَّجْرِيْ لِاَجَلٍ مُّسَمًّى ؕ يُدَبِّرُ الْاَمْرَ يُفَصِّلُ الْاٰيٰتِ لَعَلَّكُمْ

[1]"इस्तवा अलल अर्श" को भावार्थ यसभन्दा अगाडी भइसकेको छ कि यसबाट तात्पर्य अल्लाह तआलाको अर्शमा (सिंहासन) स्थिर हुनु हो। मोहद्देसीन (हदीसहरूका ज्ञानी) को यही पथ हो। उनी यसको विस्तृत कल्पना गर्दैनन्, जस्तो केही अन्य समूह यसमा तथा प्रभुका अन्य गुणहरूमा कष्ट कल्पना गर्दछन्। तर मोहद्देसीन भन्छन् कि यस अवस्थाको वर्णन गर्न सकिदैन तथा न यसको कुनै कुरोसँग उपमा दिन सकिन्छ। (अल-शूरा)।

[2]यसको एउटा अर्थ यो पनि हो कि एउटा निर्धारित समयसम्म अर्थात् केयामतसम्म अल्लाहका आदेशबाट चलिराख्नेछन्। जस्तो कि भनेको छ।

﴿ وَالشَّمْسُ تَجْرِيْ لِمُسْتَقَرٍّ لَّهَا ؕ ذٰلِكَ تَقْدِيْرُ الْعَزِيْزِ الْعَلِيْمِ ﴾

"तथा सूर्य आफ्नो स्थिर हुने समयसम्म चलिरहने छ।" (सूर: यासीन-३८)

दोस्रो अर्थ यो हो कि चन्द्रमा तथा सूर्य आ-आफ्ना लक्ष्यतिर अग्रसर रहन्छन्, सूर्य आफ्नो चक्र एक वर्षमा तथा चन्द्रमा एक महिनामा पूरा गर्दछ। जस्तो कि भन्यो :

بِلِقَآءِ رَبِّكُمْ تُوْقِنُوْنَ ۝

आफ्ना निशानीहरू खुलारुपले वर्णन गरिराखेको छ ताकि तिमीले आफ्नो प्रभुसित साक्षात्कारको कुरो विश्वास गर ।

وَهُوَ الَّذِىْ مَدَّ الْاَرْضَ وَجَعَلَ فِيْهَا رَوَاسِىَ وَاَنْهٰرًا ۭ وَمِنْ كُلِّ الثَّمَرٰتِ جَعَلَ فِيْهَا زَوْجَيْنِ

(३) तथा उसैले धर्तीलाई बिस्तृत पारी ओछ्याइदियो तथा त्यसमा पर्वत तथा नदीहरू उत्पन्न गरिदिएको छ,[1] तथा त्यसमा हरप्रकारका फलहरूका जोडी दुई-दुई गरी पैदा गरेको छ ।[2] त्यसैले रात्री

﴿وَالْقَمَرَ قَدَّرْنٰهُ مَنَازِلَ﴾
"तथा हामीले चन्द्रमाका अनेक स्थान निर्धारित गरेका छौं ।" (सूरः यासीन-३९)

सात ठूला ग्रह समूह छन्, जसमध्ये दुईटा सूर्य तथा चन्द्रमा हुन् । यहाँ मात्र यी दुईको वर्णन गरिएको छ किनभने यिनै दुईटा सबभन्दा विशाल तथा महत्वपूर्ण छन्, जब यी दुबै पनि अल्लाहको आदेशका अधीन छन् त यी देवता अथवा पूजनीय हुन सक्दैनन्, पूजाको योग्य त त्यही छ, जसले उनलाई अधीन बनाइराखेको छ, यसकारण भन्यो ।

﴿لَا تَسْجُدُوا لِلشَّمْسِ وَلَا لِلْقَمَرِ وَاسْجُدُوا لِلّٰهِ الَّذِىْ خَلَقَهُنَّ اِنْ كُنْتُمْ اِيَّاهُ تَعْبُدُوْنَ﴾

"सूर्य तथा चन्द्रमाका समक्ष शिर नभुकाउ, त्यस अल्लाह समक्ष शिर भुकाउ जसले उनीहरूलाई उत्पन्न गर्‍यो, यदि तिमी केवल त्यसको पूजा गर्न चाहन्छौ ।" (सूरः हा.मीम.सजदः-३७)

﴿وَالشَّمْسَ وَالْقَمَرَ وَالنُّجُوْمَ مُسَخَّرٰتٍ بِاَمْرِهٖ﴾
"सूर्य, चन्द्रमा तथा ताराहरू, सबै उसको आदेशका अधीन छन् ।" (सूरः अल-आराफ़-५४)

[1]धर्तीको लम्बाई-चौडाईको अनुमान पनि जनसामान्यको लागि कठिन छ तथा उच्च तथा विशाल पर्वतहरूद्वारा धर्तीमा जस्तो किल्ला गाडिएका छन् । नदी-नाला तथा स्रोतहरूको यस्तो श्रृङ्खला स्थापित गर्‍यो कि जसबाट मनुष्य स्वयं पनि लाभान्वित हुन्छन् तथा आफ्ना खेतहरूको सिंचाई पनि गर्दछन् जसबाट विभिन्न प्रकारका अनाज़ तथा फल पैदा हुन्छन्, जसका आकार-प्रकार भिन्न हुन्छन् तथा स्वादमा भिन्न हुन्छन् ।

[2]यसको एउटा अर्थ यो हो भाले तथा पोथी दुबै बनायौ, जस्तो कि आधुनिक आविष्कारहरूले यसको पुष्टि गरेका छन् । दोस्रो अर्थ (जोडी-जोडीको) यो हो कि गुलियो-अमिलो, चिसो-तातो, कालो-सेतो तथा स्वादिष्ट-कटुस्वाद यसैप्रकार एक-अर्काबाट भिन्न तथा विपरीत प्रकारको पैदा गर्‍यो ।

اثْنَيْنِ يُغْشِي الَّيْلَ النَّهَارَ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّقَوْمٍ يَتَفَكَّرُونَ ③

बाट दिनलाई लुकाउँछ। निश्चय नै विचार एवं चिन्तन गर्नेहरूका लागि त्यसमा धेरै निशानीहरू (लक्षण) छन्।

وَفِي الْأَرْضِ قِطَعٌ مُّتَجَاوِرَاتٌ وَجَنَّاتٌ مِّنْ أَعْنَابٍ وَزَرْعٌ وَنَخِيلٌ صِنْوَانٌ وَغَيْرُ صِنْوَانٍ يُسْقَىٰ بِمَاءٍ وَاحِدٍ وَنُفَضِّلُ بَعْضَهَا عَلَىٰ بَعْضٍ فِي الْأُكُلِ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّقَوْمٍ يَعْقِلُونَ ④

(४) तथा धर्तीमा विभिन्न प्रकारका भू-भागहरू एक अर्कासित जोडिएका छन्।[१] तथा अंगुरका बगैंचाहरू छन् तथा खेत एवं खजुरहरूका वृक्ष छन्। हाँगाहरू भएका तथा केही यस्ता छन्[२] जुन हाँगाहरू भएका छैनन्, सबै एकै पानीबाट सिंचिन्छन्। तैपनि हामीले पैदावार र स्वादमा केहीलाई केही माथि श्रेष्ठता दिन्छौं।[३] यसमा बुद्धिमानीहरूका लागि धेरै निशानी छन्।

وَإِن تَعْجَبْ فَعَجَبٌ قَوْلُهُمْ أَإِذَا كُنَّا تُرَابًا أَإِنَّا لَفِي خَلْقٍ جَدِيدٍ ۗ أُولَٰئِكَ الَّذِينَ كَفَرُوا بِرَبِّهِمْ ۖ وَأُولَٰئِكَ الْأَغْلَالُ

(५) तथा यदि तिमीलाई आश्चर्य हुन्छ भने वास्तवमा उनको यो भनाई आश्चर्यजनक छ कि के जब हामी माटो भइहाल्नेछौं त के हामी नयाँ जन्म लिनेछौं।[४] यिनै ती मानिसहरू हुन्, जसले आफ्नो प्रभुसित कुफ्र गरे। यी नै हुन् जसका

[१](متجاورات) एक-अर्काका निकट तथा समानान्तर अर्थात् धर्तीको एक क्षेत्र विकसित तथा उब्जाउ छ, अत्याधिक पैदावार दिन्छ। त्यसको साथमै बाँझो भूमि छ, जसमा कुनै प्रकारको पनि पैदावार हुँदैन।

[२](صنوان) को एउटा अर्थ आपसमा नजीक भएको तथा (غير صنوان) को अर्थ अलग-अलग गरिएका छन् दोस्रो अर्थ (صنوان) एउटा वृक्ष जसका कैयन् शाखाहरू छन्, जस्तै अनार, इंजीर तथा केही खजूरहरू। तथा (غير صنوان) जो यस प्रकारको हुँदैन बरु शाखा नभएको।

[३]अर्थात् धर्ती पनि एक, पानी, वायु पनि एक। परन्तु फल तथा अनाज विभिन्न प्रकारका तथा उनका स्वाद एवं बनौट पनि एक-अर्कासित भिन्न।

[४]अर्थात् जुन शक्तिले प्रथम पटक जन्म दियो, त्यसको लागि पुनः त्यस कुरोलाई बनाउनु कुनै कठिन काम होइन। परन्तु यी काफ़िर विचित्र कुरा भन्दछन् कि पुनः हामी कसरी पैदा गरिनेछौं ?

فِيٓ أَعۡنَاقِهِمۡۖ وَأُوْلَٰٓئِكَ أَصۡحَٰبُ ٱلنَّارِۖ هُمۡ فِيهَا خَٰلِدُونَ ۝٥

घाँटीहरूमा पासो हुनेछन्। तथा यी नै हुन् जो नरकमा बास गर्ने हुन्, जो त्यसमा सधैं रहनेछन्।

وَيَسۡتَعۡجِلُونَكَ بِٱلسَّيِّئَةِ قَبۡلَ ٱلۡحَسَنَةِ وَقَدۡ خَلَتۡ مِن قَبۡلِهِمُ ٱلۡمَثُلَٰتُۗ وَإِنَّ رَبَّكَ لَذُو مَغۡفِرَةٖ لِّلنَّاسِ عَلَىٰ ظُلۡمِهِمۡۖ وَإِنَّ رَبَّكَ لَشَدِيدُ ٱلۡعِقَابِ ۝٦

(६) तथा जो तिमीसित दण्डको माँगमा शीघ्रता गरिराखेका छन् सुख भन्दा पूर्व नै निश्चय उनीभन्दा पहिला (उदाहरण स्वरुप) यातनाहरू आइसकेका छन् ।[1] तथा निःसन्देह तिम्रो प्रभु क्षमावान् छ, मानिसहरूका अनायास अत्याचारको पनि ।[2] तथा यो पनि निश्चित कुरो छ कि तिम्रो प्रभु दण्ड दिनुमा पनि कठोर छ ।[3]

---

[1]अर्थात् अल्लाहको प्रकोपबाट समुदाय तथा आबादीहरूको विनाशका कैयन् उदाहरण अघि गुज्रिसकेका छन्, यसको उपरान्त यिनी प्रकोप शीघ्र माँगदछन् ? यो काफ़िरहरूको उत्तरमा भनियो जसले भन्दथे कि हे पैग़म्बर ! यदि तिमी साँचो हौ भने त्यो प्रकोप हामीमाथि ल्याउ, जसबाट तिमी हामीलाई तर्साउने गरेका छौ ।

[2]अर्थात् मानिसहरूको अत्याचार तथा अवज्ञाको उपरान्त पनि त्यसले प्रकोपमा शीघ्रता गर्दैन बरु समय दिन्छ कैयन् पटक यति विलम्ब गरिदिन्छ कि निर्णय कयामतमाथि छाडिदिन्छ । यो उसको दया तथा कृपा एवं करुणाको परिणाम हो । यदि त्यसले तुरुन्त समाप्त तथा यातना दिन चाहन्छ भने यस सम्पूर्ण धर्तीमा एउटा मनुष्य शेष रहँदैन ।

﴿وَلَوۡ يُؤَاخِذُ ٱللَّهُ ٱلنَّاسَ بِمَا كَسَبُواْ مَا تَرَكَ عَلَىٰ ظَهۡرِهَا مِن دَآبَّةٖ﴾

"यदि अल्लाह तआला मानिसहरूलाई तिनको कर्मको कारण समात्न थाल्छ भने धर्तीमा एउटा पनि जीव छाड्दैन ।" (सूर: फ़ातिर-४५)

[3]यो अल्लाहको अर्को गुणको वर्णन हो ताकि मनुष्य एकैतिर दृष्टि नराखोस् । अर्कोतिर पनि हेरिराखोस्, किनभने एकैतिर तथा एउटै कोणले निरन्तर हेरिराख्नाले धेरैजसो कुराहरू अदृश्य रहन्छन् । यसकारण कुर्आन करीममा जहाँ अल्लाहको दया, कृपा तथा क्षमाको वर्णन दिन्छ, त सँगसँगै उसको अर्को विशेषता प्रभुत्व प्रचण्डता तथा शक्तिको वर्णन पनि पाईन्छ । जस्तो कि यहाँ पनि छ ताकि आशा तथा भय दुवै पक्ष समक्ष रहून्, किनभने यदि आशा नै आशा सामु रहन्छ भने अल्लाहका आदेशहरूको अवहेलना गर्नको लागि निडर भईहाल्छ तथा यदि भय नै भई प्रत्येक समय हृदय र मस्तिष्कमा छाईरहन्छ भने अल्लाहको कृपाबाट निराश भईहाल्छ तथा दुवै कुरा उचित छैनन् तथा मनुष्यका विनाशका कारण

وَيَقُوْلُ الَّذِيْنَ كَفَرُوْا لَوْلَآ اُنْزِلَ عَلَيْهِ اٰيَةٌ مِّنْ رَّبِّهٖ ۗ اِنَّمَآ اَنْتَ مُنْذِرٌ وَّلِكُلِّ قَوْمٍ هَادٍ ۝

(७) तथा काफ़िर (कृतघ्न) भन्दछन् कि उसमाथि उसको प्रभुको तर्फबाट कुनै निशानी (चमत्कार) किन अवतरित गरिएन । कुरा यो हो कि तपाईं त मात्र सचेत गर्नेवाला हुनुहुन्छ ।[1] तथा प्रत्येक समुदायका लागि मार्ग-दर्शक हुनुहुन्छ ।[2]

---

बन्न सक्छन् । यसैकारण भनिन्छ ।

( اَلْإِيمانُ بَيْنَ الْخَوْفِ وَالرَّجَاءِ )

"ईमान भय तथा आशाको मध्येमा छ ।"

अर्थात् दुबै कुराहरूका मध्ये सन्तुलन तथा समानताको नाम ईमान हो । मनुष्य अल्लाहको प्रकोपबाट निर्भय होस् तथा न उसको कृपाबाट निराश होस् । यस विषयको लागि हेर्नुस् सूर: अल-अनाम-४७, सूर: अल-आराफ़-१६७, सूर: अल-हिज्र-४९ तथा ५० आदि आयतहरू ।

[1]प्रत्येक नबीलाई अल्लाह तआ़ला अवस्था तथा आवश्यकता अनुसार तथा आफ्नो नीति तथा विवेकको आधारमा केही निशानीहरू तथा चमत्कार प्रदान गर्दछ । परन्तु काफ़िर आफ्ना इच्छा अनुसार चमत्कारका अभिलाषी रहेका छन् । त्यस्तै मक्काका काफ़िर नबी सल्लल्लाहु अलैहि वसल्लमसित भन्थे सफ़ा नामक पर्वतलाई सुन बनाइदिइओस् अथवा पर्वतहरूको स्थानमा स्रोत तथा नदीहरू बग्न थालून् आदि । जब उनका इच्छा अनुसार चमत्कार देखाइन्नथ्यो त भन्दथे कि यसमा कुनै निशानी, चमत्कार किन अवतरित गरिएन ? अल्लाह तआ़लाले भन्नुभयो :

> "हे पैग़म्बर ! तिम्रो काम केवल आमन्त्रण तथा सतर्क गरिदिनु हो । त्यो तिमी गर्दैरह । कसैले स्वीकार गरोस्, नगरोस् त्यसबाट तिमीलाई कुनै मतलव छैन, यसकारण कि मार्गमा हिंडाइदिनु यो हाम्रो काम हो । तिम्रो काम मार्ग देखाउनु हो, त्यस मार्गमा हिंडाउनु, यो तिम्रो काम होइन, हाम्रो काम हो ।"

[2]अर्थात् प्रत्येक समुदायको मार्गदर्शनको लागि अल्लाह तआ़लाले मार्गदर्शक अवश्य पठाएको छ । यो अर्कै कुरा हो कि समुदायहरूले यो मार्ग अपनाए अथवा अपनाएनन् । परन्तु सोझो मार्गको दर्शन गर्नको निम्ति सन्देशवाहक प्रत्येक समुदायमा अवश्य आयो ।

﴿ وَاِنْ مِّنْ اُمَّةٍ اِلَّا خَلَا فِيْهَا نَذِيْرٌ ﴾

"प्रत्येक समुदायमा एउटा पथ-प्रदर्शक अवश्य आएको छ ।" (सूर: फ़ातिर-२४)

ٱللَّهُ يَعْلَمُ مَا تَحْمِلُ كُلُّ أُنثَىٰ وَمَا تَغِيضُ ٱلْأَرْحَامُ وَمَا تَزْدَادُ ۖ وَكُلُّ شَىْءٍ عِندَهُۥ بِمِقْدَارٍ ⑧

(८) पोथी आफ्नो गर्भमा जे-जति राख्दछ, त्यसलाई अल्लाह तआला राम्री जान्दछ ।[1] तथा पेट (गर्भाशय) को घट्नु-बढ्नु पनि ।[2] प्रत्येक कुरो उसको पासमा अनुमानित छ ।[3]

عَٰلِمُ ٱلْغَيْبِ وَٱلشَّهَٰدَةِ ٱلْكَبِيرُ ٱلْمُتَعَالِ ⑨

(९) गुप्त तथा खुला कुराहरूको त्यो ज्ञान राख्नेवाला छ, सबभन्दा ठूलो तथा सबभन्दा उच्च तथा उत्तम छ ।

سَوَآءٌ مِّنكُم مَّنْ أَسَرَّ ٱلْقَوْلَ وَمَن جَهَرَ بِهِۦ وَمَنْ هُوَ مُسْتَخْفٍۭ بِٱلَّيْلِ وَسَارِبٌۢ بِٱلنَّهَارِ ⑩

(१०) तिमीहरूमध्ये कसैको आफ्नो कुरा गुप्तरुपले भन्नु तथा उच्च स्वरमा भन्नु तथा जो रात्रिमा लुकेको छ तथा जो दिनमा चलिराखेको छ, सबै अल्लाहको लागि एकैनास छ ।

لَهُۥ مُعَقِّبَٰتٌ مِّنۢ بَيْنِ يَدَيْهِ وَمِنْ خَلْفِهِۦ يَحْفَظُونَهُۥ مِنْ أَمْرِ ٱللَّهِ ۗ إِنَّ ٱللَّهَ لَا يُغَيِّرُ مَا بِقَوْمٍ حَتَّىٰ يُغَيِّرُوا۟ مَا بِأَنفُسِهِمْ ۗ وَإِذَآ

(११) त्यसका रक्षक[4] मनुष्यका अगाडी-पछाडी नियुक्त छन्, जो अल्लाहको आदेशले त्यसको रक्षा गर्दछन् । कुनै समुदायको अवस्था अल्लाह (तआला) परिवर्तन गर्दैन, जबसम्मकि उनीहरू स्वयं परिवर्तन न होऊन्, जो उनका हृदय[5] मा छन् ।

[1]माताको गर्भमा के छ ? भाले छ अथवा पोथी, सुन्दर छ अथवा कुरुप, सपूत तथा कपूत, दीर्घ आयु अथवा अल्प आयु ? सबै कुरा केवल अल्लाह तआला नै जान्दछ ।

[2]यसबाट तात्पर्य गर्भको अवधि जो सामान्यत: नौ महिना हुन्छ, परन्तु घट्छ तथा बढ्छ पनि, कुनै समय यो दस महिना तथा कुनै समय सात-आठ महिनाको भईदिन्छ, यसको पनि ज्ञान अल्लाहको अतिरिक्त कसैलाई छैन ।

[3]अर्थात् कसैको जीवनकाल कति छ ? त्यसलाई भोजनको कति भाग प्राप्त हुनेछ ? यसको पूरा अनुमान अल्लाहलाई छ ।

[4](معقّبات) बहुवचन हो (معقّبة) को । एक-अर्काको पछाडी आउनेवाला अथवा फरिश्ताहरू हुन्, जो पालैपालो एक-अर्का पश्चात आउँछन् । दिनका फरिश्ताहरू जान्छन् त रातका फ़रिश्ताहरू आउँछन् । राति जान्छन् त दिनका आउँछन् ।

[5]यसको व्याख्याको लागि हेर्नुस् सूर: अंफ़ाल-५३ को व्याख्या ।

أَرَادَ اللَّهُ بِقَوْمٍ سُوٓءًا فَلَا مَرَدَّ لَهُۥ ۚ وَمَا لَهُم مِّن دُونِهِۦ مِن وَالٍ ﴿١١﴾

अल्लाह (तआ़ला) जब कुनै समुदायलाई दण्ड दिन निर्णय गरेको हुन्छ त त्यो परिवर्तन गर्दैन तथा त्यसको अतिरिक्त कोही पनि उनको संरक्षक पनि छैन ।

هُوَ ٱلَّذِى يُرِيكُمُ ٱلْبَرْقَ خَوْفًا وَطَمَعًا وَيُنشِئُ ٱلسَّحَابَ ٱلثِّقَالَ ﴿١٢﴾

(१२) त्यो अल्लाह नै हो, जसले तिमीलाई विद्युतको चमक तर्साउनको लागि तथा आशा दिलाउनको लागि[1] देखाउँछ तथा ठूला बादलहरू पैदा गर्छ ।[2]

وَيُسَبِّحُ ٱلرَّعْدُ بِحَمْدِهِۦ وَٱلْمَلَٰٓئِكَةُ مِنْ خِيفَتِهِۦ وَيُرْسِلُ ٱلصَّوَٰعِقَ فَيُصِيبُ بِهَا مَن يَشَآءُ وَهُمْ يُجَٰدِلُونَ فِى ٱللَّهِ وَهُوَ شَدِيدُ ٱلْمِحَالِ ﴿١٣﴾

(१३) तथा गर्जन त्यसको प्रशंसा तथा महिमाको वर्णन गर्दछ तथा फ़रिश्ताहरू पनि त्यसको भयले,[3] त्यही आकाशबाट बिजुली खसाल्छ तथा जसमाथि चाहन्छ, त्यसमाथि पार्दछ ।[4] काफ़िर अल्लाहको विषयमा झगडा गरिराखेका छन् तथा अल्लाह सर्वशक्तिशाली छ ।[5]

لَهُۥ دَعْوَةُ ٱلْحَقِّ ۖ وَٱلَّذِينَ يَدْعُونَ مِن دُونِهِۦ لَا يَسْتَجِيبُونَ لَهُم

(१४) उसैलाई पुकार्नु सत्य छ,[6] जुन व्यक्तिहरू त्यसको अतिरिक्त अरुहरूलाई पुकार्दछन्, उनीहरू

[1]जसबाट बटुवा-यात्री तर्सन्छन् तथा घरहरूमा रहने किसान तथा कृषक त्यसको आशिर्वाद तथा लाभको आशा राख्दछन् ।

[2]गह्रुङ्गो बादलहरूसित तात्पर्य ती बादल हुन् जसमा वर्षाको पानी हुन्छ ।

[3]जस्तो अन्य स्थानमा भन्यो:

﴿وَإِن مِّن شَىْءٍ إِلَّا يُسَبِّحُ بِحَمْدِهِۦ﴾

"प्रत्येक वस्तु अल्लाहको महिमाको वर्णन गर्दछ ।" (सूर: बनी इस्राईल-४४)

[4]अर्थात् यसबाट जसलाई चाहन्छ नाश गरिदिन्छ ।

[5](مِحَالٌ) को अर्थ शक्ति, सोधपूछ तथा प्रगाढ आदि गरिएका छन् अर्थात् त्यो अत्यन्त शक्तिशाली, अत्याधिक सोधपूछ गर्नेवाला तथा प्रगाढ विचारवाला छ ।

[6]अर्थात् भय तथा आशाको समय उसै एक अल्लाहलाई पुकार्नु उचित छ किनभने त्यही सबैको पुकार सुन्दछ तथा स्वीकार गर्दछ अथवा आमन्त्रण, इबादत (बन्दना) को अर्थमा छ ।

بِشَيْءٍ إِلَّا كَبَاسِطِ كَفَّيْهِ إِلَى الْمَاءِ لِيَبْلُغَ فَاهُ وَمَا هُوَ بِبَالِغِهِ ۚ وَمَا دُعَاءُ الْكَافِرِينَ إِلَّا فِي ضَلَالٍ ﴿١٤﴾

तिनका कुनै पुकारका उत्तर दिँदैनन् जस्तै कुनै व्यक्ति आफ्नो हात पानीतिर फैलाएको होस् कि उसको मुखमा परोस्, जबकि त्यो पानी त्यसको मुखमा पुग्नेवाला छैन ।[1] ती भ्रष्टाचारीहरूका जति पुकार छ, सबै भ्रष्ट छ ।[2]

وَلِلَّهِ يَسْجُدُ مَن فِي السَّمَاوَاتِ وَالْأَرْضِ طَوْعًا وَكَرْهًا وَظِلَالُهُم بِالْغُدُوِّ وَالْآصَالِ ۩ ﴿١٥﴾

(१५) तथा अल्लाहकै लागि आकाशहरू तथा धर्तीका सबै जीव प्रसन्नता तथा अप्रसन्नताले सजद: (दण्डवत) गर्दछन् तथा तिनका छायाँ पनि बिहान बेलुका ।[3]

उसैको इबादत सत्य एवं उचित छ, त्यसको अतिरिक्त कोही इबादत (बन्दना) को योग्य छैन, किनभने सृष्टिको स्रष्टा, स्वामी तथा सञ्चालक त्यही हो, यसकारण कि इबादत पनि केवल उसैको अधिकार हो ।

[1]अर्थात् जो अल्लाहलाई छाडेर अरुहरूलाई सहायताको लागि पुकार्दछन्, उनको तुलना यस्तो छ, जस्तै कोही व्यक्ति टाढाबाट पानीतिर आफ्ना हातहरू फैलाएर पानीसित भनोस् कि तिमी मेरो मुखसम्म आईहाल, स्पष्ट छ कि पानी अचल छ, त्यसलाई थाहा छैन कि त्यो मलाई आफ्नो मुखसम्म पुग्नुको माँग गरिराखेको छ । तथा न त्यसमा यो शक्ति छ कि आफ्नो स्थानबाट हिंडेर त्यसको हात तथा मुखसम्म पुगोस् । यसैप्रकार यी मूर्तिपूजक अल्लाहका अतिरिक्त जसलाई पुकार्दछन्, उनीहरूलाई न यो थाहा छ कि कोही उनीहरूलाई पुकारिराखेको छ तथा त्यसको अमूक आवश्यकता छ । तथा न त्यस आवश्यकताको पूर्तिको त्यसमा शक्ति नै छ ।

[2]तथा व्यर्थ पनि छ किनकि त्यसबाट उनलाई कुनै लाभ हुनेछैन ।

[3]यसमा अल्लाह तआलाको महिमा एवं शक्तिको वर्णन छ कि प्रत्येक वस्तुमा त्यसको अधिकार छ तथा प्रत्येक कुरो त्यसको अधीन तथा त्यसको समक्ष नतमस्तक छ, चाहे ईमानवालाहरूको जस्तै प्रसन्नताले गरून् अथवा मूर्तिपूजकहरूको झैं अप्रसन्नताले । तथा उनको छायाँ पनि बिहान-बेलुका दण्डवत हुन्छ । जस्तो अन्य ठाउँमा भन्यौ ।

﴿أَوَلَمْ يَرَوْا إِلَىٰ مَا خَلَقَ اللَّهُ مِن شَيْءٍ يَتَفَيَّأُ ظِلَالُهُ عَنِ الْيَمِينِ وَالشَّمَائِلِ سُجَّدًا لِّلَّهِ وَهُمْ دَاخِرُونَ﴾

"के उनीहरूले देखेनन् कि अल्लाहले जुन कुरा पनि उत्पन्न गरेका छन् तिनका छायाँ दाहिने तथा बायाँबाट अल्लाहलाई दण्डवत गर्दै ढल्दछन् तथा तिनीहरू विनम्रता गर्दछन् ।" (सूर: अन-नहल-४८)

قُلْ مَنْ رَّبُّ السَّمٰوٰتِ وَالْاَرْضِؕ قُلِ اللّٰهُؕ قُلْ اَفَاتَّخَذْتُمْ مِّنْ دُوْنِهٖۤ اَوْلِيَآءَ لَا يَمْلِكُوْنَ لِاَنْفُسِهِمْ نَفْعًا وَّلَا ضَرًّاؕ قُلْ هَلْ يَسْتَوِي الْاَعْمٰى وَالْبَصِيْرُ ۙ اَمْ هَلْ تَسْتَوِي الظُّلُمٰتُ وَالنُّوْرُ ۚ اَمْ جَعَلُوْا لِلّٰهِ شُرَكَآءَ خَلَقُوْا كَخَلْقِهٖ فَتَشَابَهَ الْخَلْقُ عَلَيْهِمْؕ قُلِ اللّٰهُ خَالِقُ كُلِّ شَيْءٍ وَّهُوَ الْوَاحِدُ الْقَهَّارُ ﴿۱۶﴾

(१६) (तपाईं) सोध्नुस् कि आकाशहरू तथा धर्तीको पालनकर्ता को हो ? भनिदिनुस् अल्लाह ।[1] भनिदिनुस् किन तिमी तैपनि यसको अतिरिक्त अरुहरूलाई सहायक बनाइराखेका छौ जो स्वयं आफ्ना प्राणको पनि राम्रो-नराम्रोको अधिकार राख्दैनन् ।[2] भनिदिनुस् के अन्धो तथा आँखा भएको समान हुन सक्दछन् ? अथवा के अन्धकार तथा प्रकाश समान हुन सक्दछन् ?[3] के जसलाई यिनीहरू अल्लाहको साझेदार बनाइराखेका छन्, उनीहरूले पनि अल्लाहको जस्तै उत्पत्ति गरेका छन् कि उनको हेराईमा उत्पत्ति संदिग्ध भइहाल्यो ?

यस दण्डवत्को स्थिति के छ ? यो अल्लाह राम्ररी जान्दछ अथवा अर्को भावार्थ यसको यो हो कि काफ़िरसहित सबै सृष्टि अल्लाहका आदेशहरूका अधीन छन्, कसैमा त्यसको उल्लंघनको शक्ति छैन, अल्लाह तआला कसैलाई स्वास्थ्य देओस्, रोग देओस्, धनवान गरिदेओस् अथवा निर्धन बनाइदेओस्, जीवन देओस् अथवा मृत्यु । यी उत्पत्तिका नियमहरूमा कुनै काफ़िरलाई पनि इन्कारको शक्ति छैन ।

[1]यहाँ त पैग़म्बरहरूको मुखबाट स्वीकार छ । परन्तु कुर्‌आनका अन्य ठाउँहरूबाट स्पष्ट छ कि मूर्तिपूजकहरूको उत्तर पनि यही हुन्थ्यो ।

[2]अर्थात् जब तिमीलाई स्वीकार्य तथा मान्य छ कि आकाश तथा धर्तीको मालिक (प्रभु) अल्लाह हो, जो सबै अधिकारहरूको कुनै साझेदार बिना एक्लो मालिक हो, त फेरि तिमी त्यसलाई छोडेर यस्तालाई आफ्नो मित्र पक्षधर किन ठान्दछौ, जो स्वयं आफ्नो लागि लाभ-हानिको अधिकार राख्दैनन् ।

[3]अर्थात् जसरी अन्धो र आँखा भएको समान हुन सक्दैनन्, त्यसरी नै एकेश्वरवादी तथा अनेकेश्वरवादी समान हुन सक्दैनन् । यसकारण एउटा अल्लाहको पूजारीको हृदय एकेश्वरवादको ज्योतिले पूर्ण छ, जबकि अनेकौंको पूजारी त्यसबाट बञ्चित छ, एकेश्वरवादीका आँखा छन्, त्यो एकेश्वरवादको प्रकाश देख्दछ तथा अनेकौंको पूजारीलाई यो एकेश्वरको प्रकाश देखिँदैन, यसकारण त्यो अन्धो छ । यसैप्रकार जसरी अन्धकार तथा प्रकाश समान हुन सक्दैन । एक अल्लाहको पूजारी जसको हृदय दिव्य-ज्योतिले परिपूर्ण छ, तथा एक मूर्तिपूजक (अनेकेश्वरवादी) अज्ञान तथा अन्धविश्वासका अन्धकारहरूमा भौंतिरिरहेको छ, समान हुन सक्दैनन् ।

أَنزَلَ مِنَ السَّمَاءِ مَاءً فَسَالَتْ أَوْدِيَةٌۢ بِقَدَرِهَا فَاحْتَمَلَ السَّيْلُ زَبَدًا رَّابِيًا ۚ وَمِمَّا يُوقِدُونَ عَلَيْهِ فِى النَّارِ ابْتِغَاءَ حِلْيَةٍ أَوْ مَتَاعٍ زَبَدٌ مِّثْلُهُۥ ۚ كَذَٰلِكَ يَضْرِبُ اللَّهُ الْحَقَّ وَالْبَاطِلَ ۚ فَأَمَّا الزَّبَدُ فَيَذْهَبُ جُفَاءً ۖ وَأَمَّا مَا يَنفَعُ

भनिदिनुस् कि मात्र अल्लाह नै सबै कुराको उत्पत्तिकर्ता हो, त्यो एक्लो छ,[1] तथा सर्वशक्तिमान छ ।

(१७) त्यसैले आकाशबाट वर्षा गर्‍यो अनि आ-आफ्ना शक्ति अनुसार नहरहरू बगेर निस्के ।[2] त्यसपश्चात जलका धाराले माथि चढेर फिंजलाई उठाइहाल्यो ।[3] तथा त्यस वस्तुमा पनि जसलाई आगोमा हालेर तताउँछन्, आभूषण अथवा सामानका लागि त्यसै प्रकारका फिंजहरू छन् ।[4] यसैप्रकार अल्लाह तआला सत्य-असत्यलाई स्पष्ट गर्नको उदाहरण दिन्छ ।[5] अब फ़िज

[1]अर्थात् यस्तो कुरो छैन कि यिनीहरू कुनै शंकाका शिकार भइहालेका हुन्, वरु यो कुरा मान्दछन् कि प्रत्येक वस्तुको रचयिता मात्र अल्लाह नै हो ।

[2](بقدرها) (विस्तार अनुसार) को अर्थ हो नालाहरू अर्थात् (घाटी) (दुई पर्वतहरूका मध्येका स्थान) साँगुरो छ भने कम पानी तथा विस्तृत छ भने अधिक पानी उठाउँछ । अर्थात् कुर्‌आनको अवतरणलाई जुन मार्गदर्शन तथा वर्णनको संकलन हो, वर्षा हुनुबाट उपमा दिएको छ । यसकारण कि कुर्‌आनको लाभ पनि वर्षाको लाभ जस्तै सामान्य छ । तथा घाटीहरूको उपमा दिएको छ हृदयसँग । यसकारण कि घाटीहरू (नालाहरू) मा पानी गएर रोक्दछ, जसरी कुर्‌आन तथा ईमान ईमानवालाहरूका हृदयमा स्थिर हुन्छ ।

[3]त्यस फिंजबाट जुन पानी माथि आउँछ तथा जुन विलीन हुन्छ तथा हावाहरू जसलाई उडाएर लैजान्छन्, कुफ्र तात्पर्य छ, जुन फिंजको जस्तै उडेर जाने तथा समाप्त हुने हुन्छ ।

[4]यो अर्को उदाहरण हो कि तामा, पित्तल, शिशा अथवा स्वर्ण-चाँदीका आभूषण अथवा सामान बनाउनको लागि आगोमा तताईन्छ, त त्यसमाथि पनि फिंज आउँछ । यस फिंजबाट तात्पर्य फोहोर-मैलो हो जुन यी धातुहरूमा हुन्छ । आगोमा गरम गर्नाले फिंजको रुखमा माथि आउँछ अनि यो फिंज पनि हेर्दाहेर्दै समाप्त भएर जान्छ तथा धातु वास्तविक रूपमा शेष रहन्छ ।

[5]अर्थात् जब सत्य र असत्यको आपसमा सामना तथा भिडन्त हुन्छ, तब असत्यलाई यसैप्रकार स्थायित्व तथा स्थिरता प्राप्त हुँदैन, जुनप्रकारले बाढीको धाराको फिंज

النَّاسَ فَيَمْكُثُ فِي الْأَرْضِ ۚ كَذَٰلِكَ يَضْرِبُ اللَّهُ الْأَمْثَالَ ﴿١٧﴾

व्यर्थ भएर जान्छ ।[१] तर जुन मानिसहरूलाई लाभ पुऱ्याउने कुराहरू छन्, ती धर्तीमा बसिराखेका हुन्छन् ।[२] अल्लाह (तआला) यसैप्रकार उदाहरण दिने गर्छ ।[३]

لِلَّذِينَ اسْتَجَابُوا لِرَبِّهِمُ الْحُسْنَىٰ ۚ وَالَّذِينَ لَمْ يَسْتَجِيبُوا لَهُ لَوْ أَنَّ لَهُم مَّا فِي الْأَرْضِ جَمِيعًا وَمِثْلَهُ مَعَهُ لَافْتَدَوْا بِهِ ۚ أُولَٰئِكَ لَهُمْ سُوءُ الْحِسَابِ وَمَأْوَاهُمْ جَهَنَّمُ ۖ وَبِئْسَ الْمِهَادُ ﴿١٨﴾

(१८) जुन मानिसहरूले आफ्नो प्रभुका आदेशहरूको पालन गरे, उनीहरूका लागि भलो छ तथा जुन मानिसहरूले त्यसका आदेशको पालना गरेनन, यदि उनको पासमा त्यो सबथोक जो धर्तीमा छ बरु त्यसको साथसाथै त्यतिकै अरु पनि होस् त आफ्नो मुक्तिको लागि उनीहरू सबै दिइहाल्नेछन् ।[४] यिनै हुन् जसको लागि नराम्रो हिसाब छ,[५] तथा

पानीसँग धातुहरूको फिंज, जसलाई आगोमा तताईन्छ, धातुहरुसँग शेष रहँदैन बरु समाप्त तथा नष्ट भईहाल्छ ।

[१]अर्थात् यसबाट कुनै लाभ हुँदैन, किनभने फिंज, पानी अथवा धातुसँग शेष रहँदैन बरु विस्तारै-विस्तारै बसिहाल्छ अथवा हावा त्यसलाई उडाएर लैजान्छ । असत्यको तुलना पनि फिंजको जस्तै छ ।

[२]अर्थात् पानी, तथा स्वर्ण, चाँदी, तामा, पित्तल आदि यी कुराहरू शेष रहन्छन्, जसबाट मानिसहरू लाभान्वित रहन्छन् । त्यसैप्रकार सत्य शेष रहन्छ, जसको अस्तित्वलाई पनि विनाश छैन तथा जसको लाभ पनि थाई छ ।

[३]अर्थात् कुरालाई बुझाउन तथा मस्तिष्कमा राख्नको लागि उपमा तथा उदाहरणहरूको वर्णन हुन्छ, जस्तै यहाँ दुईटा उदाहरण वर्णन गरिए तथा त्यसैप्रकार सूर: अल-बकर:को प्रारम्भमा पाखण्डीहरूका लागि उदाहरणको वर्णन छ । यसैप्रकार सूर: नूर-३९ तथा ४० मा काफ़िरहरूका लागि दुईटा उपमाहरू छन् तथा हदीसहरूमा पनि नबी सल्लल्लाहु अलैहि वसल्लमले उदाहरणद्वारा मानिसहरूलाई धेरैजसो कुराहरू बुझाउनु भयो । (विस्तृत जानकारीका लागि हेर्नुस् तफ़सीर इब्ने कसीर)

[४]यो विषय यसभन्दा पहिला पनि दुई-तीन ठाउँहरूमा गुज्रिसकेको छ ।

[५]किनभने उनीहरूसित प्रत्येक साना-ठूला कर्महरूको हिसाब लिइने छ तथा उनको मामिला (जसबाट हिसाबमा प्रतिप्रश्न गरियो, त्यसको बाँचेर निस्कनु कठिन हुनेछ, त्यसलाई दण्ड भएर नै छाड्नेछ) को समतुल्य हुनेछ । यसकारण अगाडी भन्यो उनको ठेगाना नरक हो ।

उनको ठेगाना नरक हो, जुन साह्रै नराम्रो स्थान हो ।

(१९) के त्यो व्यक्ति जो यो ज्ञान राख्दछ कि जुन तपाईंतिर प्रभुको तर्फबाट अवतरित गरिएको छ, त्यो सत्य छ, त्यस व्यक्ति जस्तो हुनसक्छ, जो अन्धो छ । र[1] शिक्षा त यिनै स्वीकार गर्दछन्, जो बुद्धिमानी हुन्छन् ।[2]

أَفَمَن يَعْلَمُ أَنَّمَآ أُنزِلَ إِلَيْكَ مِن رَّبِّكَ ٱلْحَقُّ كَمَنْ هُوَ أَعْمَىٰٓ ۚ إِنَّمَا يَتَذَكَّرُ أُو۟لُوا۟ ٱلْأَلْبَٰبِ ﴿١٩﴾

(२०) जो अल्लाहको दिइएको वचनलाई पूरा गर्दछन् ।[3] तथा वचन भङ्ग गर्दैनन् ।[4]

ٱلَّذِينَ يُوفُونَ بِعَهْدِ ٱللَّهِ وَلَا يَنقُضُونَ ٱلْمِيثَٰقَ ﴿٢٠﴾

(२१) जो अल्लाह (तआ़ला) ले जुन कुराहरूलाई जोड्नको लागि आदेश दिएको छ, उनी त्यसलाई जोड्दछन् ।[5] तथा उनीहरू आफ्नो प्रभुसित तर्सन्छन् तथा हिसाबको कठोरताको भय राख्दछन् ।

وَٱلَّذِينَ يَصِلُونَ مَآ أَمَرَ ٱللَّهُ بِهِۦٓ أَن يُوصَلَ وَيَخْشَوْنَ رَبَّهُمْ وَيَخَافُونَ سُوٓءَ ٱلْحِسَابِ ﴿٢١﴾

[1]अर्थात् एउटा त्यो व्यक्ति जो कुर्आनको यथार्थता तथा सत्यतामा विश्वास राख्दछ, तथा अर्को अन्धो छ अर्थात् त्यसलाई कुर्आनको सत्यतामा सन्देह छ, के यी दुबै समान हुन सक्दछन् ? प्रश्न, नकारात्मक छ अर्थात् यी दुबै त्यसैप्रकार समान हुन सक्दैनन्, जुनप्रकार फिंज तथा पानी अथवा स्वर्ण, तामा तथा त्यसको फोहरमैला समान हुन सक्दैनन् ।

[2]अर्थात् जोसित स्वच्छ हृदय तथा उचित बुद्धि छैन तथा जसले आफ्ना हृदयहरूमा पापहरूका खिया लगाईसकेका छन् तथा आफ्नो बुद्धि भ्रष्ट गरिहालेका छन्, उनी यस कुर्आनबाट शिक्षा प्राप्त गर्न सक्दैनन् ।

[3]यो बुद्धिमानीहरूका गुणहरूको वर्णन भइराखेको छ । अल्लाहको वचनसित तात्पर्य, त्यसका आदेश (आज्ञा तथा निषेध) हुन्, जसको उनी पालन गर्दछन् । अथवा त्यो वचन हो, जुन वचन (عَهْدُ أَلَسْتُ) भनिन्छ, जसको विस्तृत विवरण सूर: आराफमा आइसकेको छ ।

[4]यसबाट तात्पर्य ती परस्पर सन्धि तथा वचन हुन्, जुन मनुष्य आपसमा एक-अर्कासित गर्दछन् अथवा त्यो जुन उनको तथा उनको प्रभुको मध्ये छ ।

[5]अर्थात् सम्बन्ध तथा नाताहरूलाई तोड्दैनन् बरु उनलाई जोड्दछन् तथा आपसमा सम्बन्धको पालन गर्दछन् ।

(२२) तथा उनीहरू आफ्नो प्रभुको प्रसन्नताको लागि धैर्य राख्दछन् ।[1] तथा नमाज़हरूलाई निरन्तर स्थापित राख्दछन् ।[2] तथा जे-जति हामीले उनीहरूलाई दिएका छौं, त्यसलाई प्रत्यक्ष रुपले खर्च गर्दछन् ।[3] तथा नराम्रोलाई पनि राम्रोबाट पन्छाउन्छन्,[4] उनीहरूकै लागि पारलौकिक निवासस्थान हो ।[5]

وَالَّذِيْنَ صَبَرُوا ابْتِغَآءَ وَجْهِ رَبِّهِمْ وَاَقَامُوا الصَّلٰوةَ وَاَنْفَقُوْا مِمَّا رَزَقْنٰهُمْ سِرًّا وَّعَلَانِيَةً وَّيَدْرَءُوْنَ بِالْحَسَنَةِ السَّيِّئَةَ اُولٰٓئِكَ لَهُمْ عُقْبَى الدَّارِ ﴿٢٢﴾

(२३) सधैं रहनको लागि बाग़[6] (बग़ैचा) जहाँ यिनीहरू स्वयं जानेछन् तथा उनका पूर्वज तथा पत्नी एवं सन्तानहरू मध्येबाट पनि जो पुण्य काम गर्नेवाला

جَنّٰتُ عَدْنٍ يَّدْخُلُوْنَهَا وَمَنْ صَلَحَ مِنْ اٰبَآئِهِمْ وَاَزْوَاجِهِمْ وَذُرِّيّٰتِهِمْ وَالْمَلٰٓئِكَةُ يَدْخُلُوْنَ

[1]अल्लाहको अवज्ञा तथा पापहरूबाट बच्दछन् । यो धैर्यको एउटा प्रकार हो । कठिनाई एवं दुखहरूमा धैर्य राख्दछन् । यो दोस्रो प्रकार हो ।

[2]उनका सीमाहरू तथा प्रतिबन्ध, मन तथा चित्तले लिइन् एवं निर्धारित नियमानुसार ।

[3]अर्थात् जब-जब व्यय गर्नुको आवश्यकता पर्दछ, आफन्ती तथा अरुहरूमा तथा लुकाएर एवं प्रत्यक्ष रूपले व्यय गर्दछन् ।

[4]अर्थात् उनीसँग कोही नराम्रो गर्दछ भने उनीहरू त्यसको उत्तर राम्रोपनाले दिन्छन्, अथवा क्षमा तथा बिर्सिदिने एवं सहनशीलताले काम लिन्छन् । जसरी अन्य स्थानमा अल्लाह तआ़लाले आदेश गर्नुभयो :

﴿ اِدْفَعْ بِالَّتِيْ هِيَ اَحْسَنُ فَاِذَا الَّذِيْ بَيْنَكَ وَبَيْنَهٗ عَدَاوَةٌ كَاَنَّهٗ وَلِيٌّ حَمِيْمٌ ﴾

"नराम्रोको उत्तर यसप्रकार देउ, जो राम्रो होस् । (यदि तिमी यस्तो गर्नेछौ भने) त्यो व्यक्ति जुन तिम्रो शत्रु हो, यस्तो भइहाल्नेछ कि जस्तो तिम्रो घनिष्ट मित्र हो । (सूरः हा.मीम.सजदः-३४)

[5]अर्थात् जो यी उत्तम चरित्रहरूको पालना गर्ने तथा वर्णित विशेषताहरूले युक्त हुनेछन्, उनको लागि परलोकमा घर छ ।

[6]अदनको अर्थ हो स्थायी अर्थात् सधैं रहने बगैचा ।

عَلَيْهِم مِّن كُلِّ بَابٍ ﴿٢٣﴾

हुनेछन्,[1] उनका निकट फरिश्ताहरू प्रत्येक द्वारबाट आउनेछन् ।

سَلَامٌ عَلَيْكُم بِمَا صَبَرْتُمْ ۚ فَنِعْمَ عُقْبَى الدَّارِ ﴿٢٤﴾

(२४) (भन्नेछन् कि) तिमीमाथि सलामती (शान्ति) होस्, त्यसको प्रतिफल स्वरुप जुन तिमीले धैर्यले काम गर्‍यौ । अतः कति राम्रो परिणाम छ आख़िरतको घरको ।

وَالَّذِينَ يَنقُضُونَ عَهْدَ اللَّهِ مِن بَعْدِ مِيثَاقِهِ وَيَقْطَعُونَ مَا أَمَرَ اللَّهُ بِهِ أَن يُوصَلَ وَيُفْسِدُونَ فِي الْأَرْضِ ۙ أُولَٰئِكَ لَهُمُ اللَّعْنَةُ وَلَهُمْ سُوءُ الدَّارِ ﴿٢٥﴾

(२५) तथा जुन मानिसहरू अल्लाहको वचनलाई त्यसको सुदृढता पश्चात तोडिदिन्छन् तथा जुन कुराहरूलाई जोड्न अल्लाहको आदेश छ तिनलाई भङ्ग गरिदिन्छन् तथा धर्तीमा उपद्रव फैलाउँछन्, उनका लागि धिक्कार छ तथा उनका लागि नराम्रो घर छ ।[2]

[1]अर्थात् यसप्रकार सद्व्यवहार सम्बन्धिहरूलाई आपसमा एकत्रित गरिदिनेछ, ताकि एक-अर्काको दर्शन गरेर नेत्र शितलता प्राप्त होस्, यहाँसम्मकि तल्लो श्रेणीका स्वर्गवासीलाई पनि उच्च श्रेणी प्रदान गर्नेछ ताकि उनीहरू आफ्ना सम्बन्धिहरूसँग एकत्रित होउन्, भन्यो ।

﴿وَالَّذِينَ آمَنُوا وَاتَّبَعَتْهُمْ ذُرِّيَّتُهُم بِإِيمَانٍ أَلْحَقْنَا بِهِمْ ذُرِّيَّتَهُمْ وَمَا أَلَتْنَاهُم مِّنْ عَمَلِهِم مِّن شَيْءٍ﴾

"तथा ती मानिसहरू जो ईमान ल्याए तथा उनका सन्तानले ईमानका साथ उनका अनुसरण गरे त हामीले मिलाइदिनेछौं उनका साथ उनका सन्तानलाई तथा उनका कर्महरूबाट हामी केही घटाउने छैनौं ।" (सूरः अल-तूर-२१)

यसवाट जहाँ यो ज्ञान हुन्छ कि चरित्रवान सम्बन्धिहरूलाई अल्लाह तआला, स्वर्गमा एकत्रित गर्नेछ, त्यहीं यो पनि ज्ञात भयो कि यदि कसैको पासमा ईमान तथा सत्कर्मको पूँजी हुनेछैन, त त्यो स्वर्गमा जाने छैन, चाहे त्यसका अन्य अति नजीकका सम्वन्धि स्वर्गमा गएका होउन्, किनभने स्वर्गमा प्रवेश वंश तथा परिवारको आधारमा होइन, ईमान तथा कर्मको आधारमा हुनेछ ।

مَنْ بَطَّأَ بِهِ عَمَلُهُ لَمْ يُسْرِعْ بِهِ نَسَبُهُ

"जसले त्यसको कर्म पछाडी छोडिदियो, त्यसको वंश उसलाई अगाडी बढाउने छैन ।" (सहीह मुस्लिम किताबुल जिक्र वद्दुआ, बाब फ़ज़्लिल इज़्तेमाअे अला तिलावतिल कुर्आन)

[2]यो सत्कर्मीहरूका साथ कुकर्मीहरूको परिणामको वर्णन गरिदियो ताकि मनुष्य यस परिणामबाट बच्न प्रयत्न गरोस् ।

اَللّٰهُ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ وَيَقْدِرُ ۭ وَفَرِحُوْا بِالْحَيٰوةِ الدُّنْيَا ۭ وَمَا الْحَيٰوةُ الدُّنْيَا فِي الْاٰخِرَةِ اِلَّا مَتَاعٌ ﴿٢٦﴾

(२६) अल्लाह (तआ़ला) जसको जीविका चाहन्छ, बढाउँछ तथा घटाउँछ ।[१] यी त संसारको जीवनमा मुग्ध भइहाले ।[२] यद्यपि कि संसार परलोकको तुलनामा अत्याधिक तुच्छ पूँजी हो ।[३]

وَيَقُوْلُ الَّذِيْنَ كَفَرُوْا لَوْلَآ اُنْزِلَ عَلَيْهِ اٰيَةٌ مِّنْ رَّبِّهٖ ۭ قُلْ اِنَّ اللّٰهَ يُضِلُّ مَنْ يَّشَآءُ وَيَهْدِيْٓ اِلَيْهِ مَنْ اَنَابَ ﴿٢٧﴾

(२७) काफ़िर भन्दछन् कि उनीमाथि कुनै निशानी (चमत्कार) किन अवतरित गरिएन ? जवाफ दिनुस् कि जसलाई अल्लाह विचलित गर्न चाहन्छ, गरिदिन्छ तथा जो उसतिर नतमस्तक हुन्छ, त्यसलाई मार्ग देखाउँछ ।

---

[१]जब काफ़िर तथा मूर्तिपूजकहरूको लागि यो भन्यो कि उनका लागि नराम्रो घर छ त मनमा यो सन्देह उत्पन्न हुनसक्छ कि संसारमा त उनलाई हरेक प्रकारको सुख प्राप्त छ, त्यसको खण्डनको लागि भन्यो कि सांसारिक साधन तथा व्यावसायको कमी अथवा अधिकता यो अल्लाहको अधिकारमा छ, त्यो आफ्नो इच्छाले तथा कुनै कारणवश (जसलाई मात्र त्यही जान्दछ) कसैलाई अधिक तथा कसैलाई कम दिन्छ। जीविकाको अधिकता यस कुराको प्रमाण होइन कि अल्लाह तआ़ला त्योसित प्रसन्न छ तथा कमीको अर्थ यो होइन कि अल्लाह तआ़ला उसमाथि क्रोधित छ ।

[२]कसैलाई यदि संसारको धन अधिक प्राप्त भइराखेको छ कि जबकि त्यो अल्लाहको आज्ञाकारी छ, त यो प्रसन्न तथा निश्चित हुने स्थान होइन, किनभने यो अवसर हो । थाहा छैन कतिखेर यो अवधि समाप्त हुन्छ तथा अल्लाहको पकडमा जकडिन्छ ।

[३]हदीसमा वर्णित छ कि संसारको मुल्य परलोकको अपेक्षा यसप्रकार छ जस्तै कोही व्यक्ति आफ्नो औंला समुद्रमा चोपेर निकाल्छ, त देख्छ कि समुद्रको जलको अपेक्षा उसको औंलामा कति पानी आयो ? (सहीह मुस्लिम किताबुलजन्नः, बाबु फ़नाइद्दुनिया व बयानुल हश्र यौमल कियामः) एउटा अन्य हदीस मा छ कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम कहीं जाँदा बाखाको एउटा मृत बच्चाबाट पास भयो, त त्यसलाई देखेर उहाँले भन्नुभयो :

"अल्लाहको सौगन्ध संसार अल्लाहको निकट यसभन्दा पनि अधिक तुच्छ छ, जति यो मरेको बच्चा आफ्ना स्वामीहरूका निकट त्यस समय तुच्छ थियो, जब उनले त्यसलाई फ्याँके ।" (सहीह मुस्लिम किताबुज्जुहदे वर्रेकाक़)

ٱلَّذِينَ ءَامَنُوا۟ وَتَطْمَئِنُّ قُلُوبُهُم بِذِكْرِ ٱللَّهِ ۗ أَلَا بِذِكْرِ ٱللَّهِ تَطْمَئِنُّ ٱلْقُلُوبُ ﴿٢٨﴾

(२८) जो मानिसहरू ईमान ल्याए, उनका हृदय अल्लाहको स्मरण गर्नुबाट शान्ति प्राप्त हुन्छ, स्मरण राख कि अल्लाहको स्मरणले नै शान्ति प्राप्त हुन्छ ।[1]

ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ طُوبَىٰ لَهُمْ وَحُسْنُ مَـَٔابٍ ﴿٢٩﴾

(२९) जसले विश्वास गरे तथा जसले पुण्यका कार्य पनि गरे उनीहरूका लागि खुशहाली (समृद्धि) छ ।[2] तथा सर्वश्रेष्ठ स्थान छ ।

كَذَٰلِكَ أَرْسَلْنَٰكَ فِىٓ أُمَّةٍ قَدْ خَلَتْ مِن قَبْلِهَآ أُمَمٌ لِّتَتْلُوَا۟ عَلَيْهِمُ ٱلَّذِىٓ أَوْحَيْنَآ إِلَيْكَ وَهُمْ يَكْفُرُونَ بِٱلرَّحْمَٰنِ ۚ قُلْ هُوَ رَبِّى لَآ إِلَٰهَ إِلَّا هُوَ عَلَيْهِ تَوَكَّلْتُ

(३०) त्यसैप्रकार हामीले तपाईंलाई त्यस समुदायमा पठाएका छौं,[3] जसभन्दा पहिला धेरै समुदाय गुज्रिसकेका छन् कि तपाईं उनीहरूलाई हाम्रो तर्फबाट जुन वह्यी (प्रकाशना) तपाईंमाथि अवतरित छ पढेर सुनाउनुस्, यी अल्लाह कृपालुलाई नकार्नेवाला हुन् ।[4] (तपाई) भनिदिनुस् कि मेरो प्रभु त त्यही

[1]अल्लाहको वर्णनबाट तात्पर्य त्यसको एकेश्वरवादको वर्णन हो, जसबाट मूर्तिपूजकहरूका हृदयमा संकोच उत्पन्न हुन्छ, अथवा त्यसको इबादत, कुर्आन पढ्नु, ऐच्छिक प्रार्थनाहरू, विन्ति तथा ध्यान लगाउनु हो, जुन ईमानवालाहरूका हृदयको भोजन हो अथवा त्यसका आदेश एवं निर्देशहरूको अनुगमन तथा पालना गर्नु हो, जसबिना ईमानवाला तथा अल्लाहसित तर्सनेवाला ब्याकूल रहन्छन् ।

[2](طوبى) का विभिन्न अर्थ भनिएका छन्, जस्तै पुण्य, पवित्र, चमत्कार, प्रतिस्पर्धा स्वर्गमा विशेष वृक्ष अथवा निर्धारित स्थान आदि । भावार्थ सबैको एउटै छ अर्थात् स्वर्गमा उत्तम स्थान यसको सुख-सुवधा ।

[3]जुनप्रकार हामीले तपाईंलाई सचेत गर्नेवाला रसूलको रूपमा पठाएका छौं, त्यसैप्रकार तपाईंभन्दा पहिलाका समुदायहरूमा रसूल पठाएका थियौं, उनीहरूलाई पनि यसैप्रकार झूठा भनिएको थियो, जुनप्रकार तपाईंलाई गरियो तथा जुनप्रकार झुठ्लाउनुको परिणामस्वरुप ती समुदाय नाश गरिए, यिनीहरू पनि त्यस परिणामबाट निश्चिन्त रहनु हुँदैन ।

[4]मक्काका मूर्तिपूजक "रहमान" (कृपानिधि) शब्दबाट धेरै भयभीत हुन्थे, हुदैबियाको सन्धिको अवसरमा जब बिस्मिल्लाह हिर्रहमानिर्रहीमका शब्द लेखिए त उनीहरूले भने कि "रहमान" (कृपानिधि) तथा रहीम (दयालु) के हो ? हामी जान्दैनौं । (इब्ने कसीर)

وَإِلَيْهِ مَتَابِ ۝

हो, त्यसबाहेक वस्तुत: कोही पनि पूजाको योग्य छैन,[1] उसैमाथि मेरो भरोसा छ । तथा उसैतिर मेरो आकर्षण छ ।

وَلَوْ أَنَّ قُرْآنًا سُيِّرَتْ بِهِ الْجِبَالُ أَوْ قُطِّعَتْ بِهِ الْأَرْضُ أَوْ كُلِّمَ بِهِ الْمَوْتَىٰ ۗ بَل لِّلَّهِ الْأَمْرُ جَمِيعًا ۗ أَفَلَمْ يَيْأَسِ الَّذِينَ آمَنُوا أَن لَّوْ يَشَاءُ اللَّهُ لَهَدَى النَّاسَ جَمِيعًا ۗ وَلَا يَزَالُ الَّذِينَ كَفَرُوا تُصِيبُهُم بِمَا صَنَعُوا قَارِعَةٌ أَوْ تَحُلُّ قَرِيبًا مِّن دَارِهِمْ حَتَّىٰ يَأْتِيَ وَعْدُ اللَّهِ ۚ إِنَّ اللَّهَ لَا يُخْلِفُ الْمِيعَادَ ۝

(३१) तथा यदि (मानौं कि) कुर्आनद्वारा पर्वत चलाइदिएको भए अथवा धर्ती टुक्रा-टुक्रा गरिदिएको भए अथवा मृतकहरूसित कुरो गराइदिएको भए (तैपनि उनी ईमान ल्याउने थिएनन्) कुरो यो हो कि सबै कार्य अल्लाहको हातमा छ ।[2] त के ईमानवालाहरू यस कुरालाई जान्दैनन् कि यदि अल्लाह तआ़लाले चाहेको भए सबै मानिसहरूलाई सोझो मार्गमा ल्याइदिन्थ्यो ? काफ़िरहरूलाई त उनको कुफ्रको परिणाममा सधैं कुनै न कुनै कठोर यातना पुगिराख्नेछ अथवा उनका घरहरूको छिमेकमा अवतरित भइरहनेछ ।[3]

---

[1]अर्थात् रहमान मेरो त्यो प्रभु हो, जसबाहेक कोही पूज्य छैन ।

[2]इमाम इब्ने कसीर भन्दछन् कि प्रत्येक आकाशीय पुस्तकलाई कुर्आन भनिन्छ, जुनप्रकार एउटा हदीसमा वर्णित छ कि आदरणीय दाऊद पशुहरूलाई तयार गर्नको लागि आदेश दिन्थे तथा यसै अवधिमा एक पटक कुर्आन पढिहाल्थे (सहीह बुख़ारी किताबुल अम्बिया) यहाँ स्पष्ट कुरो छ कि कुर्आनबाट तात्पर्य ज़बूर हो । आयतको अर्थ यो हो कि यदि अघि कुनै आकाशीय पुस्तक यस्तो अवतरित भएको भए जसलाई सुनेर पर्वत हिंड्न थाल्थे अथवा धर्तीको दूरता पूरा भइहाल्थ्यो अथवा मृतक मानिसहरू बोलिहाल्थे त कुर्आन करीममा यो विशेषता यसभन्दा पनि उत्तमरुपले विद्यमान हुन्थ्यो किनभने यो चमत्कार तथा भाषा शैलीमा अघिका सबै पुस्तकहरूभन्दा उच्च छ । तथा केहीले यसको भावार्थ यो वर्णन गरेका छन् कि यदि यस कुर्आनद्वारा यी चमत्कार प्रकट भएको भए, तैपनि यी काफ़िर ईमान ल्याउँदैनथे, किनभने ईमान ल्याउनु (विश्वास गर्नु) अथवा नल्याउनु यो अल्लाहको इच्छामा निर्भर छ । चमत्कारहरूमाथि होइन । यसैले आदेश भयो कि सबै कार्य अल्लाहकै हातमा छ ।

[3]जुन उनको दृष्टि तथा ज्ञानमा अवश्य आउनेछ ताकि उनीहरू शिक्षा ग्रहण गर्न सकून् ।

यहाँसम्मकि अल्लाहको वचन आइपुग्नेछ।[1] निःसन्देह अल्लाह तआला वचन भङ्ग गर्दैन।

(३२) तथा निःसन्देह तपाईंभन्दा अघिका पैगम्बरहरूसँग उपहास गरिएको थियो तथा मैले पनि काफिरहरूलाई छूट दिएको थिए, अनि अन्ततः उनीहरूलाई समातिहालेको थिए, त मेरो प्रकोप कस्तो रह्यो ?[2]

وَلَقَدِ اسْتُهْزِئَ بِرُسُلٍ مِّنْ قَبْلِكَ فَأَمْلَيْتُ لِلَّذِينَ كَفَرُوا ثُمَّ أَخَذْتُهُمْ فَكَيْفَ كَانَ عِقَابِ ﴿٣٢﴾

(३३) अथवा त्यो अल्लाह जो दृष्टि राख्दछ, प्रत्येक व्यक्तिद्वारा गरिएको कर्ममाथि,[3] उनीहरूले अल्लाहका साझेदार ठहराएका छन्, भनिदिनुस् अलि तिनका नाम त लेऊ,[4] के

أَفَمَنْ هُوَ قَائِمٌ عَلَىٰ كُلِّ نَفْسٍ بِمَا كَسَبَتْ وَجَعَلُوا لِلَّهِ شُرَكَاءَ قُلْ سَمُّوهُمْ أَمْ تُنَبِّئُونَهُ بِمَا لَا يَعْلَمُ

[1]अथवा केयामत (प्रलय) आइहालोस् अथवा मुसलमानहरूलाई पूर्ण विजय तथा अधिकार प्राप्त भइहालोस्।

[2]हदीसमा वर्णित छ। إِنَّ اللهَ لَيُمْلِي لِلظَّالِمِ حَتَّى إِذَا أَخَذَهُ لَمْ يُفْلِتْهُ

"अल्लाह तआला अत्याचारीहरूलाई अवसर दिंदैजान्छ, यहाँसम्मकि जब तिनलाई समात्छ त फेरि छोड्दैन।"

यस पश्चात नबी सल्लल्लाहु अलैहि वसल्लमले यो कुरआनको आयत पढ्नुभयो।

﴿وَكَذَٰلِكَ أَخْذُ رَبِّكَ إِذَا أَخَذَ الْقُرَىٰ وَهِيَ ظَالِمَةٌ إِنَّ أَخْذَهُ أَلِيمٌ شَدِيدٌ﴾

"यसैप्रकार तिम्रो प्रभुको पकड छ, जब त्यसले अत्याचार गर्ने बस्तीहरूलाई समात्छ। निःसन्देह त्यसको पकड अत्यन्त कडा एवं कठोर छ।" (सहीह बुखारी तफ़सीर सूरः हूद तथा सहीह मुस्लिम किताबुल बिर्रे, बाब तहरिमिज्जुलम)

[3]यहाँ यसको उत्तर लिप्त छ। अर्थात् के त्यो यी झूठा देवताहरू समान हुनसक्छ, जसको यिनीहरू पूजा गर्दछन्, जो कसैलाई लाभ पुऱ्याउन अथवा न हानि पुऱ्याउनको शक्ति राख्दैनन्, न उनीहरूले देख्दछन् न उनीहरूले बुद्धि तथा समझ राख्दछन्।

[4]अर्थात् हामीहरूलाई पनि भन ताकि उनीहरूलाई चिन्न सकौं। यसकारण कि उनको कुनै वास्तविकता नै छैन। यसकारण अगाडी भने के तिमी अल्लाहलाई ती कुराहरू बताउँछौ, जुन त्यो धर्तीमा जान्दै-जान्दैनन्, अर्थात् उनको अस्तित्व नै छैन।

فِي الْأَرْضِ أَمْ بِظَاهِرٍ مِّنَ الْقَوْلِ ۗ بَلْ زُيِّنَ لِلَّذِينَ كَفَرُوا مَكْرُهُمْ وَصُدُّوا عَنِ السَّبِيلِ ۗ وَمَن يُضْلِلِ اللَّهُ فَمَا لَهُ مِنْ هَادٍ ﴿٣٣﴾

तिमीले अल्लाहलाई ती कुराहरू बताउँछौ, जुन त्यो धर्तीमा जान्दै-जान्दैन, अथवा सतही कुरामात्र बनाइराखेका छौ,[1] वास्तविक कुरा यो हो कि कुफ्र गर्नेहरूका लागि उनको आडम्बरका कुरा नै राम्रा लाग्दछन् ।[2] तथा उनी सत्य-मार्गबाट रोकिएका छन्, तथा जसलाई अल्लाहले मार्ग-विचलित गर्दछ, त्यसलाई मार्ग दर्शाउने कोही छैन ।[3]

यसकारण कि यदि धर्तीमा उनको अस्तित्व भएको भए त अल्लाह तआ़लाको ज्ञानमा अवश्य हुन्थ्यो, उसबाट कुनै कुरा लुकेको छैन ।

[1]यहाँ (ظاهر) (ज़ाहिर) कल्पनाको अर्थमा छ अर्थात यी केवल उनका काल्पनिक कुरा हुन् । अर्थ यो हो कि तिमी यी मूर्तिहरूको पूजा यस कल्पनाबाट गर्दछौ कि यिनी लाभ-हानि पुऱ्याउन सक्दछन् तथा तिमीले उनका नाम पनि देवता राखेका छौ । यद्यपि यी नामहरू तिम्रा तथा तिम्रा पूर्वजबाट राखिएका हुन् जसको कुनै प्रमाण अल्लाहले अवतरित गरेको छैन । यिनीहरू मात्र कल्पना तथा मनपरी गर्छन् । (सूर: अल-नज्म-२३)

[2]छलबाट तात्पर्य, उनको ती पथभ्रष्ट विश्वासका कर्म हुन्, जसमा शैतानले उनलाई फँसाएर राखेको छ, शैतानले पथ-भ्रष्टतामाथि पनि आकर्षक आवरण चढाइएको छ ।

[3]जुनप्रकार अन्य स्थानमा छ ।

﴿وَمَن يُرِدِ اللَّهُ فِتْنَتَهُ فَلَن تَمْلِكَ لَهُ مِنَ اللَّهِ شَيْئًا﴾

"जसलाई अल्लाह पथ-विचलित गर्न विचार गर्छ, त तिमी अल्लाहबाट उसको लागि केही अधिकार राख्दैन ।" (सूर: अल-मायद:-४१) तथा भन्यो :

﴿إِن تَحْرِصْ عَلَىٰ هُدَاهُمْ فَإِنَّ اللَّهَ لَا يَهْدِي مَن يُضِلُّ ۖ وَمَا لَهُم مِّن نَّاصِرِينَ﴾

"यदि तिमी उनको मार्ग-दर्शनको इच्छा राख्दछौ भने (याद राख) अल्लाह तआ़ला त्यसलाई मार्ग-दर्शन प्रदान गर्दैन, जसलाई त्यो पथभ्रष्ट गर्दछ तथा उनको कुनै सहायता हुनेछैन ।" (सूर: अल-नहल-३७)

لَهُمْ عَذَابٌ فِي الْحَيٰوةِ الدُّنْيَا وَلَعَذَابُ الْاٰخِرَةِ اَشَقُّ ۚ وَمَا لَهُمْ مِّنَ اللّٰهِ مِنْ وَّاقٍ ﴿٣٤﴾

(३४) उनीहरूका लागि सांसारिक जीवनमा पनि दुख छ,[1] तथा आख़िरत (परलोक) को यातना त अत्याधिक कठोर छ ।[2] तथा उनीहरूलाई अल्लाहको क्रोधबाट बचाउने कोही छैन ।

مَثَلُ الْجَنَّةِ الَّتِيْ وُعِدَ الْمُتَّقُوْنَ ۭ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۭ اُكُلُهَا دَاۗىِٕمٌ وَّظِلُّهَا ۭ تِلْكَ عُقْبَى الَّذِيْنَ اتَّقَوْا ڰ وَّعُقْبَى الْكٰفِرِيْنَ النَّارُ ﴿٣٥﴾

(३५) त्यस स्वर्गको विशेषता जसको वचन परहेजग़ारहरूलाई दिइएको छ, यो हो कि त्यसमा नहरहरू बगिराखेका छन् । त्यसका फल सधैं रहने छन् तथा त्यसका छायाँ पनि । यो हो प्रतिफल परहेजग़ारहरू (जितेन्द्रिहरू) को,[3] तथा काफ़िरहरूको परिणाम नरक हो ।

وَالَّذِيْنَ اٰتَيْنٰهُمُ الْكِتٰبَ يَفْرَحُوْنَ بِمَآ اُنْزِلَ اِلَيْكَ وَمِنَ الْاَحْزَابِ

(३६) तथा जसलाई हामीले किताब प्रदान गरेका छौं,[4] उनीहरू त जे-जति तपाईंमाथि अवतरित गरिन्छ, त्यसबाट

---

[1]यसबाट तात्पर्य हत्या तथा बन्दी बनाउनु हो, जुन मुसलमानहरूसँगको युद्धमा ती काफ़िरहरूको भागमा आउँछ ।

[2]जुनप्रकार नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि (لِعَان) गर्ने जोडासित भन्नुभएको थियो ।

اِنَّ عَذَابَ الدُّنْيَا أَهْوَنُ مِنْ عَذَابِ الْآخِرَةِ

"सांसारिक यातना परलोकको यातनाभन्दा अत्याधिक सहज छ ।" (सहीह मुस्लिम किताबुल लेआन) यसको अतिरिक्त सांसारिक यातना (जस्तोसुकै तथा जतिपनि होस्) अस्थायी तथा सामयिक छ तथा परलोकको याताना स्थाई छ । त्यसमा कमी तथा अन्त छैन । यसबाहेक नरकको आगो सांसारिक आगोभन्दा उनन्सत्तरी गुना अधिक गरम छ । तथा यसैप्रकार अन्य कुराहरू छन्, यसकारण यातनाको तीब्रतामा के सन्देह हुनसक्दछ ।

[3]काफ़िरहरूको दुष्परिणामको उपरान्त ईमान भएकाहरूका अति उत्तम परिणामको पनि वर्णन गरियो ताकि स्वर्गको प्राप्तिको लागि अभिलाषा तथा रुचि उत्पन्न होस्, यस स्थानमा इमाम इब्ने कसीरले स्वर्गका सुख, सुविधाहरू तथा उनका विशेष महत्वमा आधारित हदीसहरूको वर्णन गर्नुभएको छ, जसलाई त्यहाँ देखियोस् ।

[4]यसबाट तात्पर्य मुसलमान हुन् तथा अर्थ हो जो कुरआनका आदेशानुसार कर्म गर्दछन् ।

مَنۡ يُّنۡكِرُ بَعۡضَهٗ ؕ قُلۡ اِنَّمَاۤ اُمِرۡتُ اَنۡ اَعۡبُدَ اللّٰهَ وَلَاۤ اُشۡرِكَ بِهٖ ؕ اِلَيۡهِ اَدۡعُوۡا وَاِلَيۡهِ مَاٰبِ ۝

प्रसन्न हुन्छन्[1] तथा अन्य सम्प्रदाय त्यसका केही कुराहरूलाई अस्वीकार गर्दछन् ।[2] तपाईं घोषणा गरिदिनुस् कि मलाई त केवल यही आदेश दिइएको छ कि म अल्लाहको उपासना गरुँ तथा त्यससँग साझीदार न बनाऊ, म उसैतिर आमन्त्रित गरिराखेको छु तथा उसैतिर म फर्कनछु ।

وَكَذٰلِكَ اَنۡزَلۡنٰهُ حُكۡمًا عَرَبِيًّا ؕ وَلَئِنِ اتَّبَعۡتَ اَهۡوَآءَهُمۡ بَعۡدَ مَا جَآءَكَ مِنَ الۡعِلۡمِ ۙ مَا لَكَ مِنَ اللّٰهِ مِنۡ وَّلِيٍّ وَّلَا وَاقٍ ۝

(३७) तथा यसैप्रकार हामीले यस कुर्‌आनलाई अरबी भाषाको आदेश अवतरित गरेका छौं ।[3] तथा यदि तपाईंले उनका इच्छाहरू[4]को अनुगमन गर्नुभयो । यस पश्चात जबकि तपाईंको पासमा ज्ञान आइसकेको छ ।[5] त अल्लाहका (यातनाहरू) बाट



[1]अर्थात् कुर्‌आनको सत्यताको प्रमाण तथा साक्ष्य देखेर अझ प्रसन्न हुन्छन् ।

[2]यसबाट तात्पर्य यहूदी, इसाई, काफ़िर तथा मूर्तिपूजक हुन् । केही ज्ञाताहरूका निकट पुस्तकबाट तात्पर्य तौरात तथा इंजील हो, यिनीहरूमध्ये जो मुसलमान भए, उनीहरू प्रसन्न हुन्छन् तथा अस्वीकार गर्नेवाला ती यहूदी तथा इसाई हुन्, जो मुसलमान भए ।

[3]अर्थात् जुनप्रकारले तपाईंभन्दा अघिका रसूलहरूमाथि पनि स्थानीय भाषामा पुस्तकहरू अवतरित गरिए । त्यसैप्रकार तपाईंमाथि कुर्‌आन हामीले अरबी भाषामा उतारेका छौं, यसकारण कि तपाईंका प्रथम सम्बोधित अरबी मानिसहरू हुन्, जो मात्र अरबी भाषा जान्दछन् । यदि यो कुर्‌आन कुनै अन्य भाषामा अवतरित भएको भए यो उनका समझभन्दा बाहिरको कुरा हुन्थ्यो तथा मार्गदर्शन प्राप्त गर्नुमा यिनीहरूका लागि बहाना हुन्थ्यो । हामीले कुर्‌आनलाई अरबी भाषामा अवतरित गरेर यो बहाना पनि हटाइदियौं ।

[4]यसबाट तात्पर्य अहले किताबका केही आकांक्षाहरू हुन्, जसलाई उनीहरू चाहन्थे कि अल्लाहका अन्तिम रसूल अप्नाउन् जस्तै बैतुल मोकद्दसलाई स्थाई "क़िबला" बनाइराख्नु तथा उनको अन्धविश्वासहरूको विरोध नगर्नु आदि ।

[5]यसबाट तात्पर्य त्यो ज्ञान हो जुन वह्‌यी (प्रकाशना) द्वारा उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई प्रदान गरिएको छ, जसमा अहले किताबका अन्धविश्वासहरूको वास्तविकता पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लममा प्रकट गरियो ।

तपाईंको न कोही पक्षधर हुनेछ तथा न रक्षक ।[1]

(३८) तथा हामीले तपाईंभन्दा पूर्व धेरै रसुलहरू पठाइसकेका छौं तथा हामीले ती सबैलाई पत्नी तथा सन्तान भएका बनाएका थियौं ।[2] यो कुनै रसूलबाट हुन सक्दैन कि कुनै निशानी अल्लाहको आज्ञा बिना ल्याओस् ।[3] प्रत्येक निर्धारित वचनको एउटा लिखित छ ।[4]

وَلَقَدْ أَرْسَلْنَا رُسُلًا مِّن قَبْلِكَ وَجَعَلْنَا لَهُمْ أَزْوَاجًا وَذُرِّيَّةً وَمَا كَانَ لِرَسُولٍ أَن يَأْتِيَ بِآيَةٍ إِلَّا بِإِذْنِ اللَّهِ لِكُلِّ أَجَلٍ كِتَابٌ ﴿٣٨﴾

[1]यो वास्तवमा मुसलमानहरूका धार्मिक ज्ञान भएकाहरूको लागि चेतावनी हो कि उनी संसारको अस्थायी लाभको लागि कुर्आन तथा हदीसका स्पष्ट आदेशहरूको तुलनामा मानिसहरूका भावनाको पछाडी नलागून्, यदि उनीहरू यस्तो गर्नेछन् भने उनलाई अल्लाहको यातनाबाट बचाउने कोही हुनेछैन ।

[2]अर्थात् तपाई सहित जति पनि रसूल तथा नबी आए, सबै मानव पुरूष थिए, जसका परिवार तथा वंश थिए तथा पत्नी एवं सन्तान थिए, उनीहरू फरिश्ता थिएनन् तथा न मनुष्यको रूपमा कुनै ज्योतिबाट उत्पन्न सृष्टि थिए । बरु मनुष्यको श्रेणीबाट नै थिए, किनभने यदि फरिश्ता भएको भए त मनुष्यको लागि उनीसित निकट हुनु तथा लगाव राख्न सक्नु सम्भव थिएन, जसबाट उनलाई पठाउनुको मुख्य उद्देश्य नै समाप्त हुन्थ्यो तथा यदि ती फरिश्ता मनुष्यको रूपमा भएको भए त संसारमा उनको न परिवार न वंश हुन्थ्यो तथा न उनका पत्नी तथा सन्तान हुन्थे । यसबाट ज्ञात हुन्छ कि सबै नबी श्रेणीको आधारमा मनुष्यको नै थिए, मनुष्को रूपमा फरिश्ता अथवा कुनै ज्योतिबाट उत्पन्न सृष्टि थिएन ।

[3]अर्थात् चमत्कारलाई प्रदर्शित गर्नु रसूलहरूको वशमा छैन कि जब उनीसित माँग गरिन्छ त उनले त्यसलाई प्रदर्शित गरिदिन्छन् । बरु पूर्णत: अल्लाहकै वशमा छ, त्यो आफ्नो इच्छा तथा ज्ञान अनुसार निर्णय गर्दछ कि चमत्कारको आवश्यकता छ अथवा छैन ? तथा यदि छ भने कुन प्रकारले देखाउने ?

[4]अर्थात् अल्लाह तआलाले जुन कुराको पनि वायदा (वाचा) गरेको छ, त्यसको एउटा समय निर्धारित छ, त्यस निर्धारित समयमा त्यो अवश्य व्यक्त हुनेछ, किनभने अल्लाहको वचन भङ्ग हुँदैन । तथा केही विद्वान भन्दछन् कि वाक्यमा प्रथम अर्थलाई पछि पारिदिइएको छ । मूल वाक्य (لِكُلِّ كِتَابٍ أَجَلٌ) हो । तथा अर्थ यो हो कि प्रत्येक विषय, जसलाई अल्लाहले लेखिसकेको छ, त्यसको एउटा निर्धारित समय छ । अर्थात मामला काफिरको इच्छा तथा आकांक्षामा छैन बरु मात्र अल्लाहको इच्छामा निर्भर छ ।

(३९) अल्लाहले जे चाहन्छ, मिटाईदिन्छ तथा जे चाहन्छ सुरक्षित राख्दछ, सुरक्षित पुस्तक (लौहे महफ़ूज) उसैको पासमा छ ।[1]

يَمْحُوا اللّٰهُ مَا يَشَاءُ وَيُثْبِتُ ۚ وَعِنْدَهٗٓ اُمُّ الْكِتٰبِ ۝٣٩

(४०) तथा उनीसित गरिएका वचनहरू मध्ये कुनै यदि हामीले तपाईंलाई देखाइदिन्छौं अथवा तपाईंलाई

وَاِنْ مَّا نُرِيَنَّكَ بَعْضَ الَّذِيْ نَعِدُهُمْ اَوْ نَتَوَفَّيَنَّكَ فَاِنَّمَا

[1]यसको एउटा अर्थ त यो हो कि त्यसले जुन आदेश चाहन्छ, निरस्त गरिदिन्छ तथा जुनलाई चाहन्छ शेष राख्दछ, अर्को अर्थ यो हो कि उसले जे भाग्यमा लेखेको छ, त्यसमा त्यो परिवर्तन गर्दैरहन्छ, त्यसको पासमा सुरक्षित पुस्तक छ, जसको पुष्टि केही हदीसहरूबाट हुन्छ । जस्तो एउटा हदीसमा वर्णित छ कि

"मनुष्य पापहरूका कारण जीविकाबाट बञ्चित गरिन्छ, प्रार्थनाबाट भाग्य परिवर्तन हुन्छ तथा सम्बन्धिहरूसँगको सद्भावबाट आयुमा बृद्धि हुन्छ ।" (मुसनद अहमद भाग ५, पृष्ठ २७७)

केही सहाबीहरू (रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका साथीहरू) बाट यो प्रार्थना उद्धृत छ ।

اَللّٰهُمَّ اِنْ كُنْتَ كَتَبْتَنَا اَشْقِيَاءَ فَامْحُنَا سُعَدَاءَ وَاِنْ كُنْتَ كَتَبْتَنَا سُعَدَاءَ فَاَثْبِتْنَا، فَاِنَّكَ تَمْحُوْ مَا شَآءَ وَتُثْبِتُ وَعِنْدَكَ اُمُّ الْكِتَابِ

आदरणीय उमरसित सम्बन्धित यो कथन छ कि काअ़बाको परिक्रमाको समय रुँदै यो दुआ पढ्दथे । (इब्ने कसीर)

"हे अल्लाह ! यदि तिमीले ममाथि दूर्भाग्य तथा पाप लेखिसकेका छौ भने त्यसलाई मेटाइदेउ, यसकारण कि तिमी जे चाहन्छौ मेटाउन सक्छौ तथा जे चाहन्छौ शेष राख्न सक्छौ, तिम्रो पासमा नै सुरक्षित पुस्तक छ, तसर्थ तिमी दूर्भाग्यलाई सौभाग्यमा तथा क्षमामा बदलिदेउ ।"

यस भावमाथि यो आलोचना पनि हुनसक्छ कि हदीसमा त यो वर्णन छ ।

(جَفَّ الْقَلَمُ بِمَا هُوَ كَائِنٌ)

"जे-जति हुने भएको छ, कलम त्यसलाई लेखेर सुकिसकेको छ ।" (सहीह बुख़ारी संख्या ५०७६)

यसको उत्तर यो हो कि उसको यो परिवर्तन पनि भाग्यमा लेखिएको निर्णयको आधारमा छ । (फ़तहुल क़दीर)

عَلَيْكَ الْبَلٰغُ وَعَلَيْنَا الْحِسَابُ ﴿٤٠﴾

हामीले मृत्यु प्रदान गर्दछौं, त तपाईंमाथि मात्र पुऱ्याइदिने जिम्मेवारी छ । हिसाब त हामीले लिनुछ ।

اَوَلَمْ يَرَوْا اَنَّا نَاْتِى الْاَرْضَ نَنْقُصُهَا مِنْ اَطْرَافِهَا ؕ وَاللّٰهُ يَحْكُمُ لَا مُعَقِّبَ لِحُكْمِهٖ ؕ وَهُوَ سَرِيْعُ الْحِسَابِ ﴿٤١﴾

(४१) के उनीहरूले देखेनन् कि हामीले धर्तीलाई त्यसका किनाराहरूबाट घटाउँदै आइराखेका छौं ?[1] अल्लाह आदेश गर्दछ तथा कोही त्यसको आदेशलाई पछाडी पार्न सक्ने छैन,[2] त्यो हिसाब लिन तीव्र छ ।

وَقَدْ مَكَرَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ فَلِلّٰهِ الْمَكْرُ جَمِيْعًا ؕ يَعْلَمُ مَا تَكْسِبُ كُلُّ نَفْسٍ ؕ وَسَيَعْلَمُ الْكُفّٰرُ لِمَنْ عُقْبَى الدَّارِ ﴿٤٢﴾

(४२) तथा उनीभन्दा अघिका मानिसहरूले पनि आफ्नो छलकपटमा कमी गरेका थिएनन् तर सबै व्यवस्था अल्लाहकै हो,[3] जुन व्यक्तिले जे-जति गरिराखेको छ, अल्लाहको ज्ञानमा छ ।[4] काफिरहरूलाई अहिले ज्ञात भइहाल्नेछ कि त्यस लोक (परलोक) को प्रतिफल कसको लागि छ ?

وَيَقُوْلُ الَّذِيْنَ كَفَرُوْا لَسْتَ مُرْسَلًا ؕ قُلْ كَفٰى بِاللّٰهِ شَهِيْدًاۢ بَيْنِىْ

(४३) तथा यी काफिरहरू भन्दछन् कि तपाईं अल्लाहको रसूल हुनुहुन्न । (तपाईं) उत्तर दिनुस् कि म तथा तिमी बीच अल्लाह साक्षीको रुपमा

[1]अर्थात् अरबको धर्ती मूर्तिपूजकहरूका लागि क्षण-क्षण संकुचित भइराखेको छ तथा इस्लामको प्रभाव तथा उत्थान भइराखेको छ ।

[2]अर्थात् कोही पनि अल्लाहका आदेशहरूलाई रद्द गर्न सक्दैन ।

[3]अर्थात् मक्काका मूर्तिपूजकहरूभन्दा अघि पनि मानिसहरूले रसूलहरूसँग छलकपट गर्दैआइरहेका छन्, परन्तु अल्लाहको योजनाको अगाडी तिनका कुनै छल तथा कपट सफल हुन पाएन, त्यसैप्रकार भविष्यमा पनि तिनको कुनै छल तथा कपट अल्लाहका योजनाहरू समक्ष सफल हुनेछैन ।

[4]त्यसले त्यस अनुसार पुरस्कार तथा दण्ड दिनेछ, राम्रा कर्म गर्नेवालाहरूलाई राम्रो प्रतिफल तथा कुकर्मीहरूलाई उनका कुकर्महरूको दण्ड ।

وَبَيْنَكُمْ ۙ وَمَنْ عِنْدَهٗ عِلْمُ الْكِتٰبِ ﴿٤٣﴾

पर्याप्त छ ।[1] तथा त्यो जोसँग किताबको ज्ञान छ ।[2]

سُوْرَةُ اِبْرٰهِيْمَ

## सूरतु इब्राहीम-१४

सूरः *इब्राहीम* मक्कामा उत्रेको तथा यसमा ५२ आयत तथा ७ रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुभारम्भ अल्लाहको नामबाट जो अत्यन्त कृपालु तथा दयालु छ ।

الٓرٰ ۚ كِتٰبٌ اَنْزَلْنٰهُ اِلَيْكَ لِتُخْرِجَ النَّاسَ مِنَ الظُّلُمٰتِ اِلَى النُّوْرِ ۙ

(१) अलिफ. लाम. रा यो सर्वश्रेष्ठ पुस्तक हामीले तपाईंतिर अवतरित गरेका छौं ताकि तपाईंले मानिसहरूलाई अन्धकार बाट प्रकाशतिर ल्याउन सक्नुहोस्[3] तिनका

---

[1]अत: त्यो जान्दछ कि म त्यसको रसूल तथा त्यसको सन्देशको आमन्त्रण दिनेवाला हूँ तथा तिमी झूटा हौ ।

[2]किताबसित तात्पर्य वास्तविक पुस्तक हो तथा तात्पर्य तौरात तथा इंजीलको ज्ञान हो अर्थात् अहले किताबमा तिनीहरू जो मुसलमान भइहालेका छन्, जस्तो अब्दुल्लाह बिन सलाम, सलमान फ़ारसी तथा तमीमदारी इत्यादि अर्थात् यो पनि जान्दछन् कि म अल्लाहको रसूल हूँ । अरबका मूर्तिपूजक विशेष समस्याहरूबारे अहले किताबसित मन्त्रणा गर्दथे तथा उनीसित सोध्थे, अल्लाह तआलाले उनलाई मार्गदर्शन प्रदान गऱ्यो कि अहले किताब जान्दछन्, उनीसित तिमी सोध । तथा केही विद्वानहरू भन्छन् कि किताबसित तात्पर्य कुरआन हो तथा किताबको ज्ञान राख्ने व्यक्तिहरू मुसलमान हुन् तथा केही विद्वानहरूले किताबसित तात्पर्य सुरक्षित पुस्तक लिएका छन् । अर्थात् जोसँग सुरक्षित पुस्तकको ज्ञान छ अर्थात् अल्लाह तआला परन्तु प्रथम भावार्थ अधिक उपयुक्त छ ।

[3]जुनप्रकार अन्य स्थानमा अल्लाह तआलाले भन्यो:

﴿هُوَ الَّذِي يُنَزِّلُ عَلَىٰ عَبْدِهِ آيَاتٍ بَيِّنَاتٍ لِّيُخْرِجَكُم مِّنَ الظُّلُمَاتِ إِلَى النُّورِ﴾

"त्यही अस्तित्व जो आफ्नो भक्तमाथि स्पष्ट निशानीहरू अवतरित गर्दछ ताकि त्यसले तिमीलाई अन्धकारबाट प्रकाशतिर निकालेर ल्याओस् ।" (सूरः अल-हदीद-९)

بِإِذْنِ رَبِّهِمْ إِلَىٰ صِرَاطِ الْعَزِيزِ الْحَمِيدِ ①

प्रभुको आदेशबाट,[1] शक्तिमान, प्रशंसित अल्लाहको मार्गतिर ।

اللَّهِ الَّذِي لَهُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۗ وَوَيْلٌ لِّلْكَافِرِينَ مِنْ عَذَابٍ شَدِيدٍ ②

(२) त्यो अल्लाहकै हो, जे-जति आकाशहरू तथा धर्तीमा छ । तथा काफिरहरू (कृतघ्नहरू) का लागि घोर यातनाको बिपत्ति छ ।

الَّذِينَ يَسْتَحِبُّونَ الْحَيَاةَ الدُّنْيَا عَلَى الْآخِرَةِ وَيَصُدُّونَ عَن سَبِيلِ اللَّهِ وَيَبْغُونَهَا عِوَجًا ۚ أُولَٰئِكَ فِي ضَلَالٍ بَعِيدٍ ③

(३) जो आख़िरत (परलोक) को तुलनामा सांसारिक जीवनको मोह गर्दछन् तथा अल्लाहको मार्गबाट रोक्दछन् तथा त्यसमा बाङ्गोपना उत्पन्न गर्न चाहन्छन्,[2] यिनीहरू नै घोर विचलन (पथ-भ्रष्टता) मा छन् ।[3]

وَمَا أَرْسَلْنَا مِن رَّسُولٍ إِلَّا بِلِسَانِ قَوْمِهِ لِيُبَيِّنَ لَهُمْ ۖ فَيُضِلُّ

(४) तथा हामीले प्रत्येक नबी (सन्देशवाहक) लाई त्यसको सामुदायिक (राष्ट्रिय) भाषामा नै पठाएका छौं ताकि उनका समक्ष स्पष्टरुपले वर्णन

﴿ اللَّهُ وَلِيُّ الَّذِينَ آمَنُوا يُخْرِجُهُم مِّنَ الظُّلُمَاتِ إِلَى النُّورِ ﴾

"अल्लाह तआला ईमानवालाहरूको मित्र हो, त्यो उनीहरूलाई अन्धकार बाट निकालेर प्रकाशतिर ल्याउँछ ।" (सूरः अल-बकरः-२५७)

[1]अर्थात् पैग़म्बर (ईशदूत) को काम प्रकाशको मार्ग देखाउनु हो, यदि कोही त्यसलाई अपनाउँदछ, त यो केवल अल्लाहको आदेश तथा इच्छाले हुन्छ किनभने मूल मार्ग-दर्शक त्यही हो । त्यसको इच्छा यदि छैन भने पैग़म्बरले चाहे जति शिक्षा-दीक्षा देउन्, मानिसहरू प्रकाशको मार्ग अपनाउन तयार हुँदैनन्, जसका कैयन् उदाहरण पूर्वका नबीहरूमा छन् तथा स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लमले आफ्नो तीब्र इच्छाका वावजूद आफ्ना प्रिय काका तालिबलाई मुसलमान गर्न सकेनन् ।

[2]यसको एउटा अर्थ यो भयो कि इस्लामको शिक्षामा मानिसहरूमा नराम्रो धारणा उत्पन्न गराउनको लागि त्रुटिहरू निकाल्न प्रयत्न गर्नेछन् तथा त्यसलाई कुरुप बनाएर प्रस्तुत गर्दछन् । अर्को अर्थ यो हो कि आफ्ना आकांक्षाहरू अनुसार यसमा परिवर्तन गर्न चाहन्छन् ।

[3]यसकारण कि उनीहरूमा वर्णित विभिन्न दोष एकत्रित भइहालेका छन् । जस्तो परलोकको अपेक्षा संसारलाई महत्व दिनु, अल्लाहको मार्गबाट मानिसहरूलाई रोक्नु तथा इस्लाम धर्ममा त्रुटि खोज्नु ।

اللّٰهُ مَنْ يَّشَاۤءُ وَيَهْدِيْ مَنْ يَّشَاۤءُ ۗ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ۝

गरिदेओस् ।[1] अल्लाह जसलाई चाहन्छ मार्ग-विचलित गर्दछ तथा जसलाई चाहन्छ मार्ग देखाउँछ, त्यो प्रभावशाली तथा विज्ञानी छ ।[2]

وَلَقَدْ اَرْسَلْنَا مُوْسٰى بِاٰيٰتِنَآ اَنْ اَخْرِجْ قَوْمَكَ مِنَ الظُّلُمٰتِ اِلَى النُّوْرِ ۙ وَذَكِّرْهُمْ بِاَيّٰىمِ اللّٰهِ ۗ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّكُلِّ صَبَّارٍ شَكُوْرٍ ۝

(५) (स्मरण गर जबकि) हामीले मूसालाई निशानीहरू दिएर पठायौं कि तिमी आफ्नो समुदायलाई अन्धकारबाट प्रकाशमा निकाल,[3] तथा उनीहरूलाई अल्लाहको उपकार स्मरण गराउ ।[4] यसमा प्रत्येक धैर्यवानका लागि निशानीहरू (लक्षण) छन् ।[5]

[1]अनि जब अल्लाह तआ़लाले संसारका मानिसहरूमाथि यो उपकार गर्‍यो कि त्यसले उनका मार्ग-दर्शनका लागि किताबहरू अवतरित गर्‍यो तथा रसूल पठायो, त यस उपकारलाई यसप्रकार पूर्ण गर्‍यो कि प्रत्येक रसूललाई सामुदायिक (जातीय) भाषामा पठायो ताकि कसैलाई प्रकाशको मार्ग बुझ्न कठिनाई नहोस् ।

[2]तर यस वर्णन तथा व्याख्याका उपरान्त मार्गदर्शन उसैलाई प्राप्त हुनेछ, जसलाई अल्लाह चाहन्छ ।

[3]अर्थात् जसरी, हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) ! हामीले तपाईंलाई तपाईंको समुदायतिर पठायौं तथा किताब अवतरित गर्‍यौं, ताकि तपाई (सल्लल्लाहु अलैहि वसल्लम) आफ्नो समुदायलाई कुफ्र तथा मूर्तिपूजाको अन्धकारबाट निकालेर ईमानको प्रकाशतिर ल्याउनुहोस्, त्यसैप्रकार मूसालाई पनि हामीले चमत्कार तथा तर्क प्रदान गरेर उनको समुदायतिर पठायौं ताकि उनले उनीहरूलाई कुफ्र तथा अज्ञानको अन्धकारबाट निकालेर ईमानको प्रकाश प्रदान गरून् । "आयत" सित तात्पर्य चमत्कार हुन् जुन मूसा अलैहिस्सलामलाई प्रदान गरिएका थिए अथवा ती नौं चमत्कार जसको वर्णन सूरः बनी इस्राईलमा गरिएको छ ।

[4](أيام الله) बाट तात्पर्य अल्लाहका ती उपकार हुन् जुन इस्राईलका सन्तानमाथि गरिए, जसको विस्तृत वर्णन अघि कैयन् पटक आइसकेको छ । अथवा (وقائع ايام) घटनाहरूको अर्थमा छ अर्थात ती घटनाहरूबारे उनलाई स्मरण गराउ, जसबाट यिनी गुज्रिसकेका छन्, जसमा अल्लाह तआ़लाका विशेष उपकार भए जसमध्ये केहीको वर्णन यहाँ आइराखेको छ ।

[5]धैर्य तथा कृतज्ञता यी दुई प्रमुख गुण हुन् तथा ईमानको आधार यिनैमाथि छ । यसकारण यहाँ यी दुईटाको वर्णन गरिएको छ, दुबै अतिश्योक्तिको रूपमा छन् । (صَبَّار) अत्याधिक धैर्य राख्ने, (شكور) अत्याधिक कृतज्ञता प्रकट गर्ने तथा धैर्यलाई कृतज्ञताभन्दा पहिला राखिएको छ । यसकारण कि (شكور) (कृतज्ञता) धैर्यकै फल हो । हदीसमा

وَإِذْ قَالَ مُوسَىٰ لِقَوْمِهِ اذْكُرُوا نِعْمَةَ اللَّهِ عَلَيْكُمْ إِذْ أَنجَاكُم مِّنْ آلِ فِرْعَوْنَ يَسُومُونَكُمْ سُوءَ الْعَذَابِ وَيُذَبِّحُونَ أَبْنَاءَكُمْ وَيَسْتَحْيُونَ نِسَاءَكُمْ ۚ وَفِي ذَٰلِكُم بَلَاءٌ مِّن رَّبِّكُمْ عَظِيمٌ ⑥

(६) तथा जति खेर मूसाले आफ्नो समुदायसित भनें कि अल्लाहका ती उपकार स्मरण गर, जुन उसले तिमीमाथि गरेको छ, जबकि उसले तिमीहरूलाई फिरऔनका साथीहरूबाट मुक्त गऱ्यो, जसले तिमीलाई निकै दुख पुऱ्याउँथे । तिम्रा छोरोहरूको हत्या गर्दथे तथा तिम्रा छोरीहरूलाई जीवित छाडिदिन्थे, यसमा तिम्रो प्रभुको तर्फबाट तिमीमाथि ठूलो उपकार थियो ।[1]

وَإِذْ تَأَذَّنَ رَبُّكُمْ لَئِن شَكَرْتُمْ لَأَزِيدَنَّكُمْ ۖ وَلَئِن كَفَرْتُمْ إِنَّ عَذَابِي لَشَدِيدٌ ⑦

(७) तथा जब तिम्रो प्रभुले तिमीलाई सावधान गरिदियो,[2] कि यदि तिमी कृतज्ञता व्यक्त गर्दछौ भने नि:सन्देह म तिमीलाई अधिक प्रदान गर्नेछु ।[3] तथा यदि तिमी कृतघ्न हुनेछौ भने निश्चय मेरो प्रकोप कठोर छ ।[4]

---

रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, मोमिनको कुरो पनि विचित्र छ । अल्लाह तआ़ला यसको लागि जुन कुराको पनि निर्णय गर्दछ, त्यो त्यसको पक्षमा राम्रो हुन्छ, यदि उसलाई दुख पुग्छ तथा त्यो धैर्य राख्दछ त यो पनि त्यसको पक्षमा श्रेष्ठ छ तथा यदि उसलाई कुनै प्रसन्नता प्राप्त हुन्छ, त्यो त्यसमाथि अल्लाहको आभारी हुन्छ, त यो पनि यसको पक्षमा उत्तम छ ।" (सहीह मुस्लिम किताबुल ज़ोहद बाब "अल-मोमिन अम्रोहु कुल्लहु खै़र"

[1]अर्थात् जसरी यो निकै ठूलो परीक्षा थियो, त्यसबाट मुक्ति अल्लाहको निकै ठूलो उपकार थियो । यसैकारण केही अनुवादकहरूले (بلاء) को अनुवाद परीक्षा तथा केहीले उपकार गरेका छन् ।

[2] (تأذن) को अर्थ (أعلمكم بوعده لكم) त्यसले आफ्नो वायदा: (वाचा) का साथ तिमीलाई सतर्क तथा सचेत गरिदिएको छ । तथा यो पनि सम्भव छ कि यो सौगन्धको अर्थमा छ, अर्थात् जब तिम्रो प्रभुले आफ्नो मान-मर्यादा तथा महिमाको सौगन्ध खाएर भन्यो । (इब्ने कसीर)

[3]अल्लाहको कृपामाथि कृतज्ञ हुँदा झन् अधिक कृपाहरू प्रदान गर्दछ ।

[4]यसको अर्थ यो भयो कि कृतघ्नता अल्लाहलाई अत्याधिक अप्रिय छ, जसको लागि उसले कठोर यातनाको चेतावनी दिएको छ । यसकारण नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि भन्नुभयो कि स्त्रीहरुको बहुसंख्यक आफ्ना पतिहरुको

(८) तथा मूसाले भने कि यदि तिमी सबै तथा धर्तीमा निवास गर्ने सबै मानिसहरू अल्लाहप्रति कृतज्ञता गरून्, तैपनि अल्लाह महान तथा प्रशंसा योग्य छ ।[1]

وَقَالَ مُوسَىٰٓ إِن تَكۡفُرُوٓاْ أَنتُمۡ وَمَن فِي ٱلۡأَرۡضِ جَمِيعٗا فَإِنَّ ٱللَّهَ لَغَنِيٌّ حَمِيدٌ ⑧

(९) के तिम्रो पासमा तिम्रा पूर्वका मानिसहरूका समाचार आएनन् ? अर्थात् नूहको समुदायका एवं आद तथा समूदका, तथा

أَلَمۡ يَأۡتِكُمۡ نَبَؤُاْ ٱلَّذِينَ مِن قَبۡلِكُمۡ قَوۡمِ نُوحٖ وَعَادٖ وَثَمُودَ

कृतघ्नताका कारण नरकमा जानेछन् । (मुस्लिम, किताबु सलातिल इदैनको आरम्भ)

[1]अभिप्राय यो हो कि मनुष्य अल्लाहको कृतज्ञता व्यक्त गर्नेछ भने त्यसमा उसैको लाभ छ । कृतघ्नता व्यक्त गर्नेछ भने अल्लाहको त्यसमा के हानि छ ? त्यो त निस्पृह छ । अखिल जगत् नै कृतघ्न भए पनि त्यसको के बिग्रने छ ? जुनप्रकार हदीस कुदसीमा वर्णित छ, अल्लाह तआला भन्दछ :

«يَاعِبَادِي! لَوْ أَنَّ أَوَّلَكُمْ وَآخِرَكُمْ، وَإِنْسَكُمْ وَجِنَّكُمْ، كَانُوا عَلَىٰ أَتْقَىٰ قَلْبِ رَجُلٍ مِنْكُمْ، مَازَادَ ذٰلِكَ فِي مُلْكِي شَيْئًا، يَاعِبَادِي! لَوْ أَنَّ أَوَّلَكُمْ وَآخِرَكُمْ، وَإِنْسَكُمْ وَجِنَّكُمْ كَانُوا عَلَىٰ أَفْجَرِ قَلْبِ رَجُلٍ مِنْكُمْ مَا نَقَصَ ذٰلِكَ فِي مُلْكِي شَيْئًا، يَاعِبَادِي! لَوْ أَنَّ أَوَّلَكُمْ وَآخِرَكُمْ، وَإِنْسَكُمْ وَجِنَّكُمْ قَامُوا فِي صَعِيدٍ وَاحِدٍ، فَسَأَلُونِي فَأَعْطَيْتُ كُلَّ إِنْسَانٍ مَسْأَلَتَهُ، مَا نَقَصَ ذٰلِكَ مِنْ مُلْكِي شَيْئًا، إِلَّا كَمَا يُنْقِصُ الْمِخْيَطُ إِذَا أُدْخِلَ فِي الْبَحْرِ»

"हे मेरा भक्तहरू! यदि तिम्रो आदि तथा अन्त एवं त्यसैप्रकार सबै मनुष्य तथा जिन्न त्यस एउटा मनुष्यको हृदयको जस्तै भइहालून्, जो तिमीमध्ये अल्लाहसित अधिक तर्सने तथा परहेजगार छ (अर्थात् कोही पनि अवहेलना गर्ने नहोस्) त त्यसबाट मेरो राज्यमा विस्तार हुने छैन । हे मेरा भक्तहरू ! यदि तिम्रा आदि तथा अन्त तथा मनुष्य तथा जिन्न त्यस एउटा मनुष्यको हृदय जस्तै भईहालून् जो तिमीमध्ये सबभन्दा ठूलो अवज्ञाकारी तथा कुकर्मी छ, त त्यसबाट मेरो राज्यमा कुनै कमी हुनेछैन । हे मेरा भक्तहरू ! यदि तिम्रा आदि तथा अन्त्य तथा मनुष्य तथा जिन्न सबै एउटा मैदानमा एकत्रित होऊन तथा मसित प्रश्न गरून् तथा म प्रत्येक व्यक्तिलाई त्यसको प्रश्नानुसार प्रदान गरिदिऊ भने, त्यसबाट मेरो कोषमा तथा राज्यमा यतिमात्र कमी हुनेछ, जति सियोलाई समुद्रमा चोपेर निकाले पछि समुद्रको जलमा हुन्छ ।" فَسُبْحَانَهُ وَتَعَالَىٰ الغني الحميد (सहीह मुस्लिम किताबुल बिर्रे बाब तहरीमिज़ जुल्मे)

وَالَّذِيْنَ مِنْ بَعْدِهِمْ ۛؕ لَا يَعْلَمُهُمْ اِلَّا اللّٰهُ ؕ جَآءَتْهُمْ رُسُلُهُمْ بِالْبَيِّنٰتِ فَرَدُّوْۤا اَيْدِيَهُمْ فِيْۤ اَفْوَاهِهِمْ وَقَالُوْۤا اِنَّا كَفَرْنَا بِمَاۤ اُرْسِلْتُمْ بِهٖ وَاِنَّا لَفِيْ شَكٍّ مِّمَّا تَدْعُوْنَنَاۤ اِلَيْهِ مُرِيْبٍ ۞

तिनका पश्चात आउनेहरूको जसलाई अल्लाहको अतिरिक्त अन्य कोही जान्दैन, उनका पासमा उनका रसूल चमत्कार ल्याए तर उनीहरूले आफ्ना मुखतिर आफ्ना हात ल्याए[1] तथा स्पष्टरुपले भनिदिए कि जे-जति तिमीलाई दिएर पठाइएको छ, हामीले त्यसलाई मान्दैनौं तथा जुन कुरोतिर तिमीले हामीलाई आमन्त्रित गरिराखेका छौ हामीलाई त त्यसमा निकै ठूलो शंका छ (हामीलाई विश्वास छैन)।[2]

قَالَتْ رُسُلُهُمْ اَفِي اللّٰهِ شَكٌّ فَاطِرِ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ يَدْعُوْكُمْ لِيَغْفِرَ لَكُمْ مِّنْ ذُنُوْبِكُمْ وَيُؤَخِّرَكُمْ اِلٰۤى اَجَلٍ مُّسَمًّى ؕ قَالُوْۤا اِنْ اَنْتُمْ

(१०) उनका रसूलहरूले उनीसित भने कि के अल्लाह (जो सत्य छ) उसको विषयमा सन्देह छ, जो आकाशहरू तथा धर्तीको स्रष्टा हो, त्यसले त तिमीलाई यसकारण बोलाइराखेको छ ताकि त्यसले तिम्रा सारा पाप क्षमा गरिदेओस्,[3]

[1]व्याख्याकारहरूले यसका विभिन्न अर्थहरूको वर्णन गरेका छन्। (१) जस्तै उनीहरूले आफ्ना हात आफ्ना मुखमा राखिहाले तथा भने कि हाम्रो त मात्र एउटै उत्तर छ कि हामी तिम्रा रिसालतलाई अस्वीकार गर्दछौं। (२) उनीहरूले आफ्ना औंलाहरूबाट आफ्ना मुखतिर संकेत गरेर भने कि सावधान रह तथा यिनी जुन सन्देश लिएर आएका छन्, त्यतातिर आकृष्ट नहोऊ। (३) उनीहरूले आफ्ना हात मुखमा उपहास तथा आश्चर्यले राखे जुनप्रकारले एउटा व्यक्तिले हाँसो थिच्नको लागि यस्तो गर्दछ। (४) उनीहरूले आफ्ना हात रसूलहरूका मुखमा राखेर भने चूप लाग। (५) क्रोध तथा जलनको कारण आफ्नो हात आफ्ना मुखमा हाले, जसरी पाखण्डीहरूको विषयमा अन्य स्थानमा आउँछ।

﴿عَضُّوا عَلَيْكُمُ الْأَنَامِلَ مِنَ الْغَيْظِ﴾

"उनीहरूले तिमीमाथि क्रोध तथा जलनले टोक्छन्।" (सूर: आले-इमरान-११९) इमाम शौकानी तथा तवरीले यसै अन्तिम अर्थलाई प्राथमिकता प्रदान गरेका छन्।

[2](مريب) अर्थात् यस्तो सन्देह कि जसबाट मन अत्याधिक व्याकुलता तथा दुविधामा घेरियोस्।

[3]अर्थात् तिमीलाई अल्लाहको विषयमा सन्देह छ, जो आकाशहरू तथा धर्तीको रचयिता छ, त्यसका अतिरिक्त त्यो ईमान तथा एकेश्वरतिर आमन्त्रित पनि मात्र यसकारण गरिराखेको छ कि तिमीलाई पापबाट शुद्ध गरोस्।

إِلَّا بَشَرٌ مِّثْلُنَا ۖ تُرِيدُونَ أَن تَصُدُّونَا عَمَّا كَانَ يَعْبُدُ آبَاؤُنَا فَأْتُونَا بِسُلْطَانٍ مُّبِينٍ ۝

तथा एउटा निर्धारित समयसम्म तिमीलाई अवसर प्रदान गरोस्, उनीहरूले भने कि तिमी त हामीजस्तै मानिस हौ,[1] तिमी चाहन्छौ कि हामीलाई ती देवताहरूको पूजाबाट रोकिदेउ जसको पूजा हाम्रा पूर्वजले गरिरहे ।[2] ल त्यसो भए हाम्रा समक्ष कुनै स्पष्ट युक्ति प्रस्तुत गर ।[3]

قَالَتْ لَهُمْ رُسُلُهُمْ إِن نَّحْنُ إِلَّا بَشَرٌ مِّثْلُكُمْ وَلَٰكِنَّ اللَّهَ يَمُنُّ عَلَىٰ مَن يَشَاءُ مِنْ عِبَادِهِ ۖ وَمَا كَانَ لَنَا أَن نَّأْتِيَكُم بِسُلْطَانٍ إِلَّا بِإِذْنِ اللَّهِ ۚ

(११) उनका पैगम्बरहरूले उनीसित भने कि यो त सत्य छ कि हामी तिमी जस्तै मनुष्य हौं । तर अल्लाह (तआला) आफ्ना भक्तहरूमध्ये जसलाई चाहन्छ आफ्नो कृपा प्रदान गर्दछ ।[4] अल्लाहको आदेशबिना हाम्रो शक्ति छैन

यसका विपरीत पनि तिमी त्यस धर्ती र आकाशको स्रष्टालाई मान्नको लागि तयार छैनौ तथा त्यसको आमन्त्रणबाट तिमीलाई इन्कार छ ?

[1]यो त्यही सन्देश हो जुन काफिरहरूलाई उत्पन्न हुँदै गर्‍यो कि मनुष्य भएर कसरी कोही अल्लाहको कुनै प्रकाशना (वह्यी) नबूअत एवं रिसालतको योग्य हुनसक्छ ।

[2]यो अर्को रुकावट (बिघ्न) हो कि हामी ती देवताहरूको उपासना कसरी छाडिदेऔं जसको उपासना हाम्रा पूर्वज गर्दै आएका छन् ? जबकि तिम्रो उद्देश्य हामीलाई उनको उपासनाबाट रोकेर एउटा ईश्वरको बन्दनामा लगाउनु हो ।

[3]निशानीहरू तथा चमत्कार प्रत्येक नबीसँग हुने गर्थ्यो, यसबाट तात्पर्य यस्तो युक्ति अथवा चमत्कार हो, जसलाई हेर्न उनको इच्छा हुन्थ्यो, जस्तै मक्काका मूर्तिपूजकहरूले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित विभिन्न प्रकारका चमत्कारहरू देखाउन माग गरेका थिए, जसको वर्णन सूरः बनी इस्राईलमा आउनेछ ।

[4]रसूलहरूले पहिलाका सन्देहहरूको उत्तरदिए कि निःसन्देह हामी तिमी जस्तै मनुष्य नै हौं तर तिम्रो सम्झनु त्रुटिपूर्ण छ कि मनुष्य रसूल हुन सक्दैन । अल्लाह तआला मनुष्यहरूका मार्गदर्शनका निम्ति मनुष्यहरूबाट नै केही मनुष्यहरूलाई प्रकाशना (वह्यी) तथा रिसालतको निम्ति रोज्दछ तथा तिमीहरूबाट नै यो उपकार अल्लाहले हामीमाथि गरेको छ ।

وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ⑪

कि हामी कुनै चमत्कार ल्याई तिमीलाई देखाऔं ।[1] तथा निष्ठावानहरूले मात्र अल्लाह (तआ़ला) माथि भरोसा राख्नुपर्छ ।[2]

وَمَا لَنَا اَلَّا نَتَوَكَّلَ عَلَى اللّٰهِ وَقَدْ هَدٰىنَا سُبُلَنَا ۭ وَلَنَصْبِرَنَّ عَلٰى مَآ اٰذَيْتُمُوْنَا ۭ وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُتَوَكِّلُوْنَ ⑫

(१२) तथा अन्ततः के कारण छ कि हामीले अल्लाह (तआ़ला) माथि भरोसा न गरौं, जबकि उसैले हामीलाई हाम्रो मार्ग देखाएको छ । तथा जुन दुःख तिमीले हामीलाई दिन्छौ त्यसमा अवश्य धैर्य नै राख्नेछौं । भरोसा गर्नेहरूलाई यही योग्य छ कि अल्लाहमाथि नै भरोसा राख्नुपर्दछ ।[3]

وَقَالَ الَّذِيْنَ كَفَرُوْا لِرُسُلِهِمْ لَنُخْرِجَنَّكُمْ مِّنْ اَرْضِنَآ اَوْ لَتَعُوْدُنَّ فِيْ مِلَّتِنَا ۭ فَاَوْحٰٓى اِلَيْهِمْ رَبُّهُمْ لَنُهْلِكَنَّ الظّٰلِمِيْنَ ⑬

(१३) तथा काफ़िरहरूले आफ्ना रसूलहरूसित भने कि हामीले तिमीलाई देशबाट निकालिदिनेछौं अथवा तिमी फेरिबाट हाम्रो धर्ममा फर्केर आउ, त उनको प्रभुले उनीतिर वह्यी (प्रकाशना) पठायौ कि हामीले ती अत्याचारीहरूकै नाश गरिदिनेछौं ।[4]

---

[1]उनका इच्छा अनुसार चमत्कारको सन्दर्भमा रसूलहरूले उत्तर दिए कि चमत्कार देखाउनु हाम्रो वशमा छैन, यो मात्र अल्लाहको वशमा छ ।

[2]यहाँ ईमान भएकाहरूसित तात्पर्य प्रथम त स्वयं नबी हुनुहुन्छ अर्थात् हामीलाई पूर्ण भरोसा अल्लाहमाथि नै गर्नुपर्छ । जस्तो कि अगाडी आदेश छः

"आखिर के कारण छ कि हामीले अल्लाहमाथि भरोसा नराखौं ?"

[3]कि त्यही काफ़िरहरूको षड्यन्त्र तथा कुविचारबाट बचाउने अस्तित्व छ यो अर्थ पनि हुनसक्छ कि हामीसित चमत्कारहरूको माँग नगर, अल्लाहमाथि भरोसा गर, उसको इच्छा हुन्छ भने चमत्कार प्रदर्शित गरिदिनेछ, अन्यथा होइन ।

[4]जस्तै अन्य कैयन् स्थानमा अल्लाह तआ़लाले भन्नुभयो :

وَلَنُسْكِنَنَّكُمُ الْأَرْضَ مِنْۢ بَعْدِهِمْ ۚ ذٰلِكَ لِمَنْ خَافَ مَقَامِيْ وَخَافَ وَعِيْدِ ﴿١٤﴾

(१४) तथा उनका पश्चात हामीले स्वयं तिमीलाई धर्तीमा बसाउनेछौं । यो उनीहरूका लागि हो जो मेरो समक्ष उभिनुको भय राख्दछन् तथा मेरो चेतावनीबाट तर्सन्छन् ।[1]

﴿وَلَقَدْ سَبَقَتْ كَلِمَتُنَا لِعِبَادِنَا الْمُرْسَلِيْنَ ☆ اِنَّهُمْ لَهُمُ الْمَنْصُوْرُوْنَ ☆ وَاِنَّ جُنْدَنَا لَهُمُ الْغٰلِبُوْنَ﴾

"तथा अघि नै भइसक्यो हाम्रो आदेश आफ्ना भक्तहरूको पक्षमा रसूल छन्, निःसन्देह उनी विजयी तथा सफल हुनेछन् तथा हाम्रो सेना पनि प्रभावशाली हुनेछ ।" (सूरः अस्साफ्फात-१७१ देखि १७३ सम्म)

﴿كَتَبَ اللّٰهُ لَاَغْلِبَنَّ اَنَا وَرُسُلِيْ﴾

"अल्लाहले यो कुरो लेखिदिएको छ कि म तथा मेरा रसूल नै प्रभावशाली हुनेछन् ।" (सूरः अल-मुजादिलः-२१)

[1]यो विषय पनि अल्लाहले कैयन् स्थानमा वर्णित गरेको छ । जस्तै,

﴿وَلَقَدْ كَتَبْنَا فِى الزَّبُوْرِ مِنْۢ بَعْدِ الذِّكْرِ اَنَّ الْاَرْضَ يَرِثُهَا عِبَادِيَ الصّٰلِحُوْنَ﴾

"हामीले लेखिदियौं ज़बूरमा शिक्षाहरूका पश्चात कि अन्ततः धर्तीका उत्तराधिकारी मेरा सत्कर्मी भक्त हुनेछन् ।" (सूरः अल-अम्बिया-१०५)

अन्य जानकारीको लागि हेर्नुस् सूरः अल-आराफ़-१२८ तथा १३७ । अतः यस अनुसार अल्लाह तआलाले नबी करीम सल्लल्लाहु अलैहि वसल्लमको सहायता गर्‍यो, उहाँ सल्लल्लाहु अलैहि वसल्लमले बडो दुखी हृदयसित मक्काबाट निस्कनु पर्‍यो तथा केही वर्ष पश्चात नै उहाँ सल्लल्लाहु अलैहि वसल्लमले मक्कामा विजेताको रूपमा प्रवेश गर्नुभयो तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई मक्कावाट निस्कन बाध्य गर्ने अत्याचारीहरू टाउको निहुराएर उभिई उहाँ सल्लल्लाहु अलैहि वसल्लमका नयनहरूका संकेतको प्रतिक्षामा थिए । तर उहाँले महान चरित्रको प्रदर्शन गर्दै (لاتثريب عليكم اليوم) भनेर सबैलाई क्षमा गरिदिनु भयो ।

[2]जुनप्रकारले अन्य स्थानमा अल्लाहको आदेश भयो :

﴿وَاَمَّا مَنْ خَافَ مَقَامَ رَبِّهٖ وَنَهَى النَّفْسَ عَنِ الْهَوٰى ☆ فَاِنَّ الْجَنَّةَ هِيَ الْمَاْوٰى﴾

"जो आफ्नो प्रभु समक्ष उभिनबाट तर्स्यो तथा आफ्ना मनलाई इच्छाहरूबाट रोकिराख्यो, निःसन्देह स्वर्ग नै त्यसको वास स्थान हो ।" (सूरः अल-नाज़िआत-४०, ४१)

وَاسْتَفْتَحُوْا وَخَابَ كُلُّ جَبَّارٍ عَنِيْدٍ ﴿١٥﴾

(१५) तथा उनीहरूले निर्णय मागे,[1] तथा सबै उद्दण्ड अट्टेरी मानिस असफल भए ।

مِّنْ وَّرَآئِهٖ جَهَنَّمُ وَ يُسْقٰى مِنْ مَّآءٍ صَدِيْدٍ ﴿١٦﴾

(१६) उसको समक्ष नरक छ, जहाँ उसलाई पीपको पानी खुवाइनेछ ।

يَّتَجَرَّعُهٗ وَلَا يَكَادُ يُسِيْغُهٗ وَيَاْتِيْهِ الْمَوْتُ مِنْ كُلِّ مَكَانٍ وَّمَا هُوَ

(१७) जसलाई कष्टले एक-एक घुट्को गरिदिइनेछ, तैपनि त्यसलाई निल्न सक्दैन तथा त्यसलाई प्रत्येक स्थानबाट मृत्यु आएको देखिनेछ तर

---

﴿وَلِمَنْ خَافَ مَقَامَ رَبِّهٖ جَنَّتَانِ﴾

"जो आफ्नो प्रभु समक्ष उभिनबाट तर्स्यो, त्यसका लागि दुईटा स्वर्ग छन् ।" (सूर: अर्रहमान-४६)

[1]यसका कर्ता अत्याचारी काफ़िर पनि हुन सक्दछन् कि उनीहरूले अन्ततः अल्लाहबाट निर्णयको माँग गरे । अर्थात् यदि यी रसूल साँचो हुन् भने हे अल्लाह ! आफ्नो निर्णय अनुसार हामीलाई नष्ट गरिदेउ, जस्तो कि मक्काका मूर्तिपूजकहरूले भने

﴿اَللّٰهُمَّ اِنْ كَانَ هٰذَا هُوَ الْحَقَّ مِنْ عِنْدِكَ فَاَمْطِرْ عَلَيْنَا حِجَارَةً مِّنَ السَّمَآءِ اَوِ ائْتِنَا بِعَذَابٍ اَلِيْمٍ﴾

"हे अल्लाह ! यदि यो कुर्आन तपाईंतिरबाट अवश्य छ भने हामीमाथि आकाशबाट ढुङ्गा वर्साउ अथवा हामीमाथि कुनै कष्टदायक प्रकोप पठाइदेउ ।" (सूर: अंफ़ाल-३२)

अथवा जसरी बद्रको युद्धको अवसरमा मक्काका मूर्तिपूजकहरूले यो इच्छा व्यक्त गरेका थिए जसको वर्णन अल्लाहले सूर: अंफ़ाल-१९ मा गरेको छ । अथवा क्रियाका कर्ता रसूल हुन् जसले अल्लाहसित विजय तथा सफलताका लागि प्रार्थना गरे, जसलाई अल्लाहले स्वीकार गर्‍यो ।

[2](صديد) पीप अथवा त्यो रगत हो जुन नरकमा जानेहरूको मासु तथा छालाबाट बगेको हुनेछ । केही हदीसहरूमा यसलाई (عُصَارَةُ أهلِ النَّارِ) (मुसनद अहमद भाग ५, पृष्ठ १७१) (नरकवासीहरूका शरीरबाट निचारिएको) तथा केही हदीसहरूमा छ कि यो यति तातो तथा उम्लिराखेको हुनेछ कि उनका मुखका निकट पुग्नासाथ उनका अनुहारका छाला पोलिएर खसिहाल्नेछन् तथा एक घुट्को पिउनासाथ पेटका आन्द्राहरू गुद्वारबाट निस्कनेछ । (أعاذنا الله منه)

بِمَيِّتٍ ۖ وَمِن وَرَآئِهِۦ عَذَابٌ غَلِيظٌ ﴿١٧﴾

त्यो मर्ने छैन ।[1] अनि त्यसको पछाडी पनि कडा यातना छ ।

مَّثَلُ ٱلَّذِينَ كَفَرُوا۟ بِرَبِّهِمْ ۖ أَعْمَٰلُهُمْ كَرَمَادٍ ٱشْتَدَّتْ بِهِ ٱلرِّيحُ فِى يَوْمٍ عَاصِفٍ ۖ لَّا يَقْدِرُونَ مِمَّا كَسَبُوا۟ عَلَىٰ شَىْءٍ ۚ ذَٰلِكَ هُوَ ٱلضَّلَٰلُ ٱلْبَعِيدُ ﴿١٨﴾

(१८) ती मानिसहरूको उदाहरण जसले आफ्नो प्रभुसित कुफ्र गरे उनका कर्म त्यस खरानीका समतुल्य छन्, जसमाथि तीब्र वायु हुरीका दिन चल्छ ।[2] जे-पनि उनीहरूले गरे, त्यसमध्ये कुनै कुरामा समर्थ हुने छैनन्, यही ठूलो विचलन हो ।

أَلَمْ تَرَ أَنَّ ٱللَّهَ خَلَقَ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ بِٱلْحَقِّ ۚ إِن يَشَأْ يُذْهِبْكُمْ وَيَأْتِ بِخَلْقٍ جَدِيدٍ ﴿١٩﴾

(१९) के तिमीले देखेनौं कि अल्लाह तआला ले आकाशहरू तथा धर्तीलाई सर्वश्रेष्ठ प्रवन्धले सृष्टि गरेको छ । यदि त्यसले चाहन्छ भने तिमी सबैको विनाश गर्नसक्छ तथा नयाँ सृष्टि ल्याउँछ ।

وَمَا ذَٰلِكَ عَلَى ٱللَّهِ بِعَزِيزٍ ﴿٢٠﴾

(२०) तथा अल्लाहको लागि यो काम अलिकति पनि कठिन छैन ।[3]

وَبَرَزُوا۟ لِلَّهِ جَمِيعًا فَقَالَ ٱلضُّعَفَٰٓؤُا۟ لِلَّذِينَ ٱسْتَكْبَرُوٓا۟ إِنَّا كُنَّا لَكُمْ

(२१) तथा सबै अल्लाह समक्ष उभिनेछन् ।[4] त्यस समय कमजोर मानिसहरू घमण्ड

[1]अर्थात् नाना प्रकारका यातनाहरूको स्वाद चाखेर उनीहरूले मृत्युको कामना गर्नेछन् । तर त्यहाँ मृत कहाँ ? त्यहाँ त त्यसैप्रकार स्थाईरूपले यातना हुनेछ ।

[2]कियामत (प्रलय) का दिन काफिरहरूका कर्महरूको पनि त्यही परिणाम हुनेछ कि त्यसको कुनै सुफल तथा पुण्य उनीहरूलाई प्राप्त हुनेछैन ।

[3]अर्थात् यदि अवज्ञा तथा अवहेलना गर्नुबाट रोकिएनौं भने अल्लाह तआला यसको सामर्थ्य राख्दछ कि त्यसले तिमीलाई ध्वस्त गर्न सक्छ, तिम्रो ठाउँमा नयाँ सृष्टि उत्पन्न गर्नसक्छ । यही विषय अल्लाहले सूरः फ़ातिर-१५ देखि १७ सम्म, सूरः मुहम्मद-३८, सूरः अल-मायदः-५४ तथा सूरः निसा-१३३ मा पनि वर्णन गरेको छ ।

[4]अर्थात् सबै महशरका मैदानमा (निर्णय हुने दिन जहाँ सबै एकत्रित हुनेछन्) अल्लाह समक्ष हुनेछन्, कोही कहीं लुक्न सक्नेछैन ।

تَبَعًا فَهَلْ اَنْتُمْ مُّغْنُوْنَ عَنَّا مِنْ عَذَابِ اللّٰهِ مِنْ شَيْءٍ ؕ قَالُوْا لَوْ هَدٰىنَا اللّٰهُ لَهَدَيْنٰكُمْ ؕ سَوَآءٌ عَلَيْنَآ اَجَزِعْنَآ اَمْ صَبَرْنَا مَا لَنَا مِنْ مَّحِيْصٍ ﴿٢١﴾

गर्नेहरूसित भन्नेछन् कि हामी त तिम्रा अधीनमा थियौं, त के तिमी अल्लाहका यातनाहरूबाट केही यातना हामीबाट समाप्त गर्न सक्ने छौं, उनीहरूले उत्तर दिनेछन् कि यदि अल्लाहले हामीलाई मार्गदर्शन दिएको भए हामीले पनि तिमीलाई मार्गदर्शन दिन्थ्यौं । अहिले त हामीलाई छट्पटी तथा धैर्य राख्नु दुबै समान छ, हाम्रो लागि कुनै उम्कने बाटो छैन ।[1]

وَقَالَ الشَّيْطٰنُ لَمَّا قُضِيَ الْاَمْرُ اِنَّ اللّٰهَ وَعَدَكُمْ وَعْدَ الْحَقِّ وَوَعَدْتُّكُمْ فَاَخْلَفْتُكُمْ ؕ وَمَا كَانَ

(२२) जब अरू कामको निर्णय गरिदिइनेछ त शैतानले भन्नेछ[2] कि अल्लाहले त तिमीलाई सत्य वचन दिएको थियो तथा मैले तिमीलाई जुन वचन दिएको थिएँ, त्यसको उल्लंघन गरे,[3] मेरो



[1]केही विद्वानहरू भन्छन् कि नरकवासी आपसमा भन्नेछन कि स्वर्गमा बस्नेहरूलाई स्वर्ग यसकारण प्राप्त भयो कि उनीहरू अल्लाहका समक्ष रुन्थे तथा विन्ति गर्दथे, आऊ हामी पनि अल्लाहको समक्ष वेदनाले रोऔं र विलाप गरौं, अत: उनीहरू रुनेछन् तथा अत्याधिक विलाप गर्नेछन् । तर त्यसको कुनै लाभ हुने छैन, फेरि भन्नेछन् कि स्वर्गवासीहरूलाई स्वर्ग उनको धैर्य तथा संयमका कारण प्राप्त भयो, लौ हामी पनि धैर्य-धारण गरौं, अनि उनीहरू धैर्यको पूर्णरूपले प्रदर्शन गर्नेछन्, तर त्यसको पनि कुनै लाभ हुनेछैन अनि त्यतिखेर भन्नेछन् कि हामी धैर्य राखौं अथवा वेदनाकासाथ रोऔं, विन्ती गरौं, अब छुटकाराको कुनै अवसर छैन । यो उनीहरूको आपसी कुराकानी नरकभित्र हुनेछ । कुरआन करीममा यसको अन्य पनि कैयन् ठाउँमा वर्णन गरिएको छ जस्तै सूर: मोमिन-४७ तथा ४८, सूर: आराफ़-३८ तथा ३९, सूर: अल-अहज़ाब ६६ देखि ६८ सम्म, यसको अतिरिक्त उनीहरू आपसमा झगडा गर्नेछन् तथा एक-अर्कामाथि विचलनको आक्षेप लगाउने छन् । इमाम इब्ने कसीर लेख्नुहुन्छ कि झगडा महशरको मैदानमा हुनेछ । यसको अधिक विस्तृत वर्णन अल्लाह तआलाले सूर: सबा-३१ देखि ३३ सम्म गरेको छ ।

[2]अर्थात् ईमान भएकाहरू स्वर्गमा तथा काफ़िर एवं मूर्तिपूजक नरकमा जानेछन्, तब शैतान नरकवासीहरूसित भन्नेछ ।

[3]अल्लाहले जुन वचन आफ्ना पैग़म्बरहरूद्वारा दिएको थियो कि मोक्ष मेरा पैग़म्बरहरूमाथि विश्वास गर्नुमा छ, उनी सत्य थिए, उनका तुलनामा मेरा वचन त पूर्ण छल तथा कपट थिए । जुनप्रकार अल्लाह तआलाले भन्नुभयो :

﴿يَعِدُهُمْ وَيُمَنِّيهِمْ ۖ وَمَا يَعِدُهُمُ الشَّيْطٰنُ اِلَّا غُرُوْرًا﴾

لِيَ عَلَيْكُمْ مِّنْ سُلْطٰنٍ اِلَّآ اَنْ دَعَوْتُكُمْ فَاسْتَجَبْتُمْ لِيْ ۚ فَلَا تَلُوْمُوْنِيْ وَلُوْمُوْٓا اَنْفُسَكُمْ ۗ مَآ اَنَا بِمُصْرِخِكُمْ وَمَآ اَنْتُمْ بِمُصْرِخِيَّ ۗ اِنِّيْ كَفَرْتُ بِمَآ اَشْرَكْتُمُوْنِ مِنْ قَبْلُ ۗ اِنَّ الظّٰلِمِيْنَ لَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٢٢﴾

कुनै दबाब तिमीलाई त थिएन,[१] हो, मैले तिमीलाई पुकारें तथा तिमीले मेरो कुरा मानिहाल्यौ,[२] तसर्थ तिमी ममाथि आरोप नलगाउ, बरु स्वयं आफूलाई धिक्कार,[३] न म तिम्रो सहायता गर्नसक्छु, तथा न तिमी मेरो गुहार तिर पुग्ने हौ,[४] म त (प्रारम्भदेखि) मान्दिन कि तिमीले मलाई यसभन्दा पूर्व अल्लाहको साझेदार ठान्दै रह्यौ ।[५] निःसन्देह अत्याचारीहरूका लागि दुखदायी यातनाहरू छन् ।[६]

---

शैतान उनीसित वचन गर्दछ तथा आशाहरू दिलाउँछ तर शैतानका यी वाचाहरू मात्र छल हुन् ।" (सूरः अल-निसा-१२०)

[१]अर्को कुरो यो कि मेरा कुराहरूमा कुनै सत्यता तथा युक्ति हुन्नथ्यो, न मेरो कुनै दवाव तिमीमाथि थियो ।

[२]हो मात्र आमन्त्रण तथा सन्देश थियो, तिमीले मेरा तर्कहीन कुराहरूलाई त स्वीकार गर्‍यौ तथा पैगम्बरहरूको तर्क तथा प्रमाण संगत कुराहरूको खण्डन गरी अस्वीकार गरिदियौ ।

[३]यसकारण सबै दोष तिम्रो स्वयंको हो, तिमीले बुद्धि तथा विवेकले काम लिएनौं, स्पष्ट निशानीहरूलाई तिमीले अपेक्षा गरिदियौं, तथा खोक्रा दावीहरूका पछाडी लागि रहयो, जसको पछाडी कुनै प्रमाण थिएन ।

[४]अर्थात् न म तिमीलाई त्यस यातनाबाट निकाल्न लगाउन सक्दछु जसमा तिमी घेरिएका छौ तथा न तिमी मलाई त्यस क्रोध तथा आक्रोधबाट बचाउन सक्छौ, जुन अल्लाहको तर्फबाट ममाथि छ ।

[५]मलाई यो कुरा पनि अस्वीकार छ कि म अल्लाहको साझेदार हूँ, यदि तिमी मलाई अथवा कुनै अन्यलाई अल्लाहको साझेदार बनाउँदै रहयौ त यो तिम्रो आफ्नो त्रुटि तथा अज्ञानता थियो, जुन अल्लाहले सम्पूर्ण सृष्टिको उत्पत्ति गरेको थियो तथा त्यसलाई नियोजित पनि गर्दैरहयो, त त्यसको साझेदार को हुनसक्थ्यो ?

[६]केही विद्वान भन्छन् कि यो वाक्य पनि शैतानको हो तथा यो त्यसको भाषणको परिशिष्ट हो । केही विद्वानहरू भन्दछन् कि शैतानको भाषण (من قبل) मा समाप्त भयो । यो अल्लाह तआलाको कथन हो ।

(२३) तथा जुन मानिसहरूले विश्वास गरे र पुण्यका काम गरे उनीहरू ती स्वर्गहरूमा प्रवेश गराइने छन्, जसको धरातलमा नहरहरू बगिराखेका छन्, जहाँ उनी सधैं बास गर्नेछन्, आफ्नो प्रभुको आदेशबाट,[1] जहाँ उनको स्वागत सलामै-सलामबाट हुनेछ ।[2]

وَاُدْخِلَ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا بِاِذْنِ رَبِّهِمْ ؕ تَحِيَّتُهُمْ فِيْهَا سَلٰمٌ ﴿٢٣﴾

(२४) के तपाईंले देख्नुभएन कि अल्लाह (तआ़ला) ले पवित्र कुराको उदाहरण एउटा पवित्र वृक्ष जस्तो वर्णन गर्‍यो जसको जरा मज़बूत तथा जसका शाखाहरू आकाशमा छन् ।

اَلَمْ تَرَ كَيْفَ ضَرَبَ اللّٰهُ مَثَلًا كَلِمَةً طَيِّبَةً كَشَجَرَةٍ طَيِّبَةٍ اَصْلُهَا ثَابِتٌ وَّفَرْعُهَا فِي السَّمَآءِ ۙ﴿٢٤﴾

(२५) जसले आफ्नो प्रभुको आदेशले प्रत्येक समय आफ्नो फल दिन्छ ।[3] तथा अल्लाह (तआ़ला) मानिसहरू समक्ष उदाहरणहरू वर्णन गर्दछ ताकि उनीहरूले शिक्षा प्राप्त गर्न सकून् ।

تُؤْتِيْۤ اُكُلَهَا كُلَّ حِيْنٍۭ بِاِذْنِ رَبِّهَا ؕ وَيَضْرِبُ اللّٰهُ الْاَمْثَالَ لِلنَّاسِ لَعَلَّهُمْ يَتَذَكَّرُوْنَ ﴿٢٥﴾

(२६) तथा दूषित कुराको तुलना नराम्रो रूख जस्तो छ, जुन धर्तीका सतहबाट

وَمَثَلُ كَلِمَةٍ خَبِيْثَةٍ كَشَجَرَةٍ خَبِيْثَةِ ۨاجْتُثَّتْ مِنْ فَوْقِ



[1]यो कुकर्मी तथा काफ़िरहरूको तुलनामा सत्यकर्मी तथा ईमानवालाको वर्णन हो । यिनका वर्णन उनीसित यसकारण गरिएको छ ताकि मानिसहरूमा ईमानका कार्य अपनाउनुको रूचि तथा लाभ उत्पन्न होस् ।

[2]अर्थात् आपसमा उनीहरूको उपहार एक-अर्काका लागि सलाम गर्नु हुनेछ । यसका अतिरिक्त फरिश्ताहरू पनि प्रत्येक द्वारबाट प्रवेश गरी उनीहरूलाई सलाम गर्नेछन् ।

[3]यसको अभिप्राय यो हो कि ईमानवालाहरूको उदाहरण त्यस वृक्ष जस्तो छ, जुन गर्मी तथा चिसो प्रत्येक ऋतुमा फल दिन्छ । यसैप्रकार ईमानवालाहरूका पुण्यका काम दिन-रातीका प्रत्येक क्षणमा आकाशतिर लगिन्छन्, **"पवित्र वाक्य"** सित इस्लाम अथवा (لا إله إلا الله) तथा पवित्र वृक्षसित ख़जूरको वृक्ष तात्पर्य छ, जस्तो कि हदीसबाट सिद्ध छ । (सहीह बुख़ारी किताबुल इल्म बाबुल फ़हम फ़िलइल्म तथा सहीह मुस्लिम किताबु स्सिफ़तिल क़ियामः बाब मिस्लुल मोमिन मिस्लुल नख़्ल:)

الْأَرْضِ مَا لَهَا مِنْ قَرَارٍ ﴿٢٦﴾

जरा सहित उखेलियो । त्यसलाई कुनै स्थिरता त छैन ।[1]

يُثَبِّتُ اللَّهُ الَّذِينَ آمَنُوا بِالْقَوْلِ الثَّابِتِ فِي الْحَيَاةِ الدُّنْيَا وَفِي الْآخِرَةِ ۖ وَيُضِلُّ اللَّهُ الظَّالِمِينَ ۚ وَيَفْعَلُ اللَّهُ مَا يَشَاءُ ﴿٢٧﴾

(२७) निष्ठावानहरूलाई अल्लाह (तआला) ले सुदृढ कुराद्वारा सांसारिक जीवनमा पनि तथा परलोकमा पनि दृढता प्रदान गर्दछ ।[2] हो अन्यायी व्यक्तिहरूलाई अल्लाह (तआला) ले विचलित गरिदिन्छ तथा अल्लाहले जे चाहन्छ गर्दछ ।

[1]नराम्रो वाक्यसित तात्पर्य कुफ्र तथा नराम्रो वृक्षसित इन्द्रायनको वृक्ष तात्पर्य छ जसको जरा धर्तीमाथि नै हुन्छ तथा अलिकति संकेतले उखिलन्छ अर्थात् काफिरको कर्मको कुनै मूल्य छैन, न उनी आकाशमा जान्छन् तथा न अल्लाहको दरबारमा स्वीकार हुन्छन् ।

[2]यसको व्याख्या हदीसमा यसप्रकार गरिएको छ कि मृत्यु पश्चात कब्र (चिहान) मा जब मुसलमानसित प्रश्न गरिन्छ, त त्यो उत्तरमा यस कुराको साक्ष्य दिन्छ कि अल्लाहको अतिरिक्त कोही पूज्य छैन तथा मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) अल्लाहका रसूल हुन् । यही अर्थ हो अल्लाहको यस कथन (يُثَبِّتُ الله الذين آمنوا) को (सहीह बुख़ारी तफ़सीर सूर: इब्राहीम तथा सहीह मुस्लिम किताबुल जन्न: व सिफाते नअीमेहा बाब अर्जे मक़अदिल मयते अलैहि व इस्बातु अज़ाबुल क़ब्रे) एउटा अन्य हदीसमा वर्णित छ कि "जब मुसलमानलाई कब्र (समाधि) मा राखिएको हुन्छ तथा त्यसका साथीहरू हिडेका हुन्छन् तथा त्यो उनका जुत्ताहरूको आवाज सुन्दछ, त्यस पश्चात त्यसको पासमा दुईटा फरिश्ताहरू (स्वर्गदूत) आउँछन् । तथा त्यसलाई उठाएर सोध्छन् कि त्यस व्यक्तिको विषयमा तिम्रो के विचार छ, यदि त्यो ईमानवाला हुन्छ भने उत्तर दिन्छ कि त्यो अल्लाहको भक्त तथा त्यसका रसूल हुन् । फरिश्ताहरूले त्यसलाई नरकको ठाउँ देखाउँछन् तथा भन्दछन् कि अल्लाहले यसको साटोमा तिम्रो लागि स्वर्गमा स्थान बनाई दिएको छ । यसप्रकार त्यो दुवै ठाउँ हेर्दछ तथा त्यसको चिहान सत्तरी हात विस्तृत गरिदिइन्छ तथा त्यसको समाधिलाई केयामतसम्मका लागि ईश्वरीय पुरस्कारले भरिदिन्छ । (सहीह मुस्लिम उपरोक्त वर्णित अध्याय (बाब) । एउटा हदीसमा छ त्यससित सोधिन्छ (مَنْ رَّبُّكَ ؟ مَا دِيْنُكَ ؟ مَنْ نَّبِيُّكَ ؟) तिम्रो प्रभु को हो ? तिम्रो धर्म के हो ? तिम्रो नबी को हो ? तब अल्लाह तआला त्यसलाई सोझो मार्ग प्रदान गर्दछ तथा त्यो उत्तर दिन्छ (رَبِّى الله) (मेरो प्रभु अल्लाह हो) (و دِيْنِى الإسلام) (मेरो धर्म इस्लाम हो) (نَبِيِّ مُحَمَّدٌ) (तथा मेरो नबी मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम हुन्) (तफ़सीर इब्ने कसीर)

أَلَمْ تَرَ إِلَى الَّذِينَ بَدَّلُوا نِعْمَتَ اللَّهِ كُفْرًا وَأَحَلُّوا قَوْمَهُمْ دَارَ الْبَوَارِ ﴿٢٨﴾

(२८) के तपाईंले उनीहरूतिर दृष्टि पार्नु भएन, जसले अल्लाहको उपकारको साटो कृतघ्नता प्रकट गरे तथा आफ्नो समुदायलाई विनाशको घरमा ल्याएर उतारे ।[1]

جَهَنَّمَ يَصْلَوْنَهَا وَبِئْسَ الْقَرَارُ ﴿٢٩﴾

(२९) अर्थात् नरकमा जसमा यी सबै जानेछन्, जुन नराम्रो ठाउँ हो ।

وَجَعَلُوا لِلَّهِ أَندَادًا لِّيُضِلُّوا عَن سَبِيلِهِ قُلْ تَمَتَّعُوا فَإِنَّ مَصِيرَكُمْ إِلَى النَّارِ ﴿٣٠﴾

(३०) तथा उनीहरूले अल्लाहको समकक्ष बनाइहाले ताकि मानिसहरूलाई अल्लाहको मार्गबाट विचलित पारून् । (तपाईं) भनिदिनुस् कि ठीक छ मोज-मज्जा गरिहाल, तिम्रो स्थान त अन्तमा नरक नै हो ।[2]

قُل لِّعِبَادِيَ الَّذِينَ آمَنُوا يُقِيمُوا الصَّلَاةَ وَيُنفِقُوا مِمَّا رَزَقْنَاهُمْ سِرًّا وَعَلَانِيَةً مِّن قَبْلِ أَن يَأْتِيَ

(३१) मेरा निष्ठावान भक्तहरूसित भनिदिनुस् कि नमाज़लाई स्थापित राखून् तथा जे-जति उनलाई हामीले दिएका छौं, त्यसबाट केही लुकाएर तथा खुलारुपमा खर्च गर्दैरहून्, यसभन्दा पूर्व कि त्या

---

[1] यसको व्याख्या सहीह बुख़ारीमा छ कि यसबाट तात्पर्य मक्काका काफ़िरहरू हुन् (सहीह बुख़ारी तफ़सीर सूर: इब्राहीम) जसले मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालतको विरोध गरी बद्रका युद्धमा मुसलमानहरूसित लडाएर आफ्ना मानिसहरूको हत्या गराइहालेका थिए । परन्तु आफ्नो भावार्थको आधारमा यो सामान्य छ तथा अर्थ यो हुनेछ कि परम आदरणीय मोहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई अल्लाह तआ़लाले समस्त संसारको लागि दया तथा मानिसहरूको लागि ईश्वरीय पुरस्कार बनाएर पठायो, त जसले त्यस वरदानको सम्मान गर्‍यो, त्यसलाई स्वीकार गर्‍यो, कृतज्ञता निर्वाह गर्‍यो तथा त्यो स्वर्गमा जाने (स्वर्गीय) भयो तथा जसले त्यस पुरस्कारको अपमान गर्‍यो खण्डन गर्‍यो तथा विरोध गर्‍यो, त्यो नरकीय हुन पुग्यो ।

[2] यो धम्की तथा चेतावनी हो कि संसारमा तिमी जे चाहन्छौ गर, तर कहिलेसम्म ? अन्ततः तिम्रो ठाउँ नरक हो ।

يَوۡمٌ لَّا بَيۡعٌ فِيهِ وَلَا خِلَٰلٌ ﴿٣١﴾

दिन आइपुगोस् जसमा न कुनै क्रय-विक्रय हुनेछ न मित्रता एवं प्रेम ।[1]

ٱللَّهُ ٱلَّذِي خَلَقَ ٱلسَّمَٰوَٰتِ وَٱلۡأَرۡضَ وَأَنزَلَ مِنَ ٱلسَّمَآءِ مَآءً فَأَخۡرَجَ بِهِۦ مِنَ ٱلثَّمَرَٰتِ رِزۡقًا لَّكُمۡۖ وَسَخَّرَ لَكُمُ ٱلۡفُلۡكَ لِتَجۡرِيَ فِي ٱلۡبَحۡرِ بِأَمۡرِهِۦۖ وَسَخَّرَ لَكُمُ ٱلۡأَنۡهَٰرَ ﴿٣٢﴾

(३२) अल्लाह त्यो हो जसले आकाशहरू तथा धर्तीलाई सृष्टि गरेको छ तथा आकाशहरूबाट वर्षा गरेर त्यसद्वारा तिम्रो जीविकाको लागि फल निकालेको छ तथा डुङ्गाहरूलाई तिम्रो वशमा गरिदिएको छ कि नदीहरूमा त्यसका आदेशबाट तैरने गरून् । त्यसैले नदी तथा नहरहरूलाई तिम्रो वशमा गरिदिएको छ ।[2]

وَسَخَّرَ لَكُمُ ٱلشَّمۡسَ وَٱلۡقَمَرَ دَآئِبَيۡنِۖ

(३३) उसैले तिम्रो लागि सूर्य तथा चन्द्रमालाई अधीन गरिदिएको छ कि निरन्तर नै

[1]नमाज़ स्थापित गर्नुको अर्थ हो कि त्यसलाई आफ्नो समयमा तथा नियमानुसार एवं ध्यान तथा विनम्र भई सम्पन्न गरियोस् जस्तो नबी सल्लल्लाहु अलैहि वसल्लमको "सुन्नत" छ । "इंफाक" को अभिप्राय हो ज़कात तिर्नु, निकट सम्बन्धिहरूसँग दयाभाव प्रकट गर्नु तथा अन्य निर्धनहरूमाथि उपकार गर्नु । यस्तो होइन कि आफ्ना आवश्यकताहरू तथा आफूमाथि निकै व्यय गरियोस् तथा अल्लाह तआलाद्वारा भनेका स्थानहरूमा व्यय गर्नुबाट पन्छिओस् । केयामतका दिन यस्तो हुनेछ जहाँ न क्रय-विक्रय सम्भव हुनेछ न कुनै मित्रता नै कसैको काम आउनेछ ।

[2]अल्लाह तआलाले जीवधारीहरूमाथि जुन उपकार गऱ्यो, ती मध्ये केहीको वर्णन गरिदैछ । भन्यो कि आकाशलाई छाना तथा धर्तीलाई ओछ्यान बनायो । तथा आकाशबाट वर्षा गरी विभिन्न प्रकारका रूख तथा फसलहरू उब्जायो जसमा स्वाद तथा बलका लागि फल पनि छन् तथा थरी-थरीका अन्न पनि, जसका रङ्ग-रूप एक-अर्कासित भिन्न छन् तथा स्वाद एवं सुगन्ध तथा लाभ पनि भिन्न छन् । डुङ्गा तथा जहाजलाई सेवाको लागि लगाइदियो कि उनी तीब्र धाराहरूलाई च्यातेर त्यसमा तैरछन् । मनुष्यहरूलाई पनि एक देशबाट अर्को देशसम्म पुऱ्याउँछन् तथा व्यापारका समग्रीहरू पनि एक स्थानबाट अर्को स्थानसम्म पुऱ्याउँछन् । धर्ती तथा पर्वतहरूबाट स्रोत तथा नदीहरू निकाल्यो ताकि तिमीले पनि पिउन सक तथा आफ्ना खेतहरूको सिंचाई गर ।

وَسَخَّرَ لَكُمُ الَّيْلَ وَالنَّهَارَ ۝

चलिराखेका छन् ।[1] तथा रात-दिनलाई पनि तिम्रो काममा लगाएको छ ।[2]

وَاٰتٰىكُمْ مِّنْ كُلِّ مَا سَاَلْتُمُوْهُ ۗ وَاِنْ تَعُدُّوْا نِعْمَتَ اللّٰهِ لَا تُحْصُوْهَا ۗ اِنَّ الْاِنْسَانَ لَظَلُوْمٌ كَفَّارٌ ۝

(३४) तथा उसैले तिमीलाई तिम्रो इच्छा अनुसार मागेका सबै कुराहरूबाट दिएको छ ।[3] यदि तिमी अल्लाहका उपकार, अनुग्रह गन्न चाहन्छौ भने उनीहरूलाई पूरा गन्न पनि सक्दैनौ,[4] निःसन्देह मनुष्य बडो अन्यायी तथा कृतघ्न छ ।[5]

---

[1]अर्थात् निरन्तर चलिराखेका हुन्छन्, कहिल्यै राति पनि रोकिन्नन् तथा न दिनमा । यसको अतिरिक्त एक-अर्काको पछाडी हिंड्छन्, तर कहिले पनि उनीहरूबीच आपसी ठक्कर हुँदैन ।

[2]रात-दिन उनको आपसी अन्तर जारी रहन्छ । कहिले रात-दिनको केही भाग लिएर लामो हुन्छ तथा कहिले दिन रातको केही भाग लिएर लामो हुनपुग्छ । तथा यो क्रम जगत्को आदिदेखि चलिराखेको छ, यसमा अलिकति पनि अन्तर आएन ।

[3]अर्थात् उसले तिम्रो आवश्यकताका सबै कुराहरू उपलब्ध गराए, जुन तिमी त्यससित माँगदछौ । तथा केही विद्वान भन्दछन् कि जे तिमी माँगदछौ, त्यसलाई पनि दिन्छ तथा जे माँगदैनौ, तर त्यसलाई ज्ञात छ कि तिमीलाई त्यसको आवश्यकता छ, त्यो पनि दिन्छ । अर्थात् तिम्रो जीविकाका सबै सुविधाहरू उपलब्ध गराउँछ ।

[4]अर्थात् अल्लाहका उपकार अगणित छन् तिनलाई कोही गन्न सक्दैन । अनि कसरी हुनसक्छ कि कोही ती उपकारहरूप्रति कृतज्ञता गर्न सकोस् । एक हदीसमा आदरणीय दाऊद अलैहिस्सलामको कथन वर्णन गरिएको छ । उनले भने, "हे पालनकर्ता ! म तिम्रो कृतज्ञता कसरी पूरा गरूँ ? जबकि कृतज्ञता गर्नु स्वयं तिम्रो तर्फबाट उपकार हो ।" अल्लाह तआलाले आदेश गऱ्यो :

> "हे दाऊद ! अहिले तिमीले मेरो कृतज्ञता पूरा गऱ्यौ जब तिमीले यो स्वीकार गऱ्यो कि हे अल्लाह ! म तिम्रो उपकारको कृतज्ञता ज्ञापनबाट पनि असमर्थ छु ।" (तफ़सीर इब्ने कसीर)

[5]अल्लाहका उपकारहरूमाथि अनुगृहीत हुनुमा आलस्यको कारण मनुष्य आफू स्वयंका साथ अत्याचार तथा अन्याय गर्दछ, विशेषरूपले जो पूर्णरूपमा नै अल्लाहबाट विमुख छन् ।

وَاِذۡ قَالَ اِبۡرٰهِيۡمُ رَبِّ اجۡعَلۡ هٰذَا الۡبَلَدَ اٰمِنًا وَّاجۡنُبۡنِىۡ وَبَنِىَّ اَنۡ نَّعۡبُدَ الۡاَصۡنَامَ ؕ‏

(३५) (इब्राहीमको यो प्रार्थना पनि याद गर) जब इब्राहीमले भने हे मेरो प्रभु ! यस नगरलाई शान्तिपूर्ण बनाइदेउ ।[1] तथा मलाई तथा मेरा सन्तानलाई मूर्तिपूजाबाट सुरक्षित राख ।

رَبِّ اِنَّهُنَّ اَضۡلَلۡنَ كَثِيۡرًا مِّنَ النَّاسِ‌ۚ فَمَنۡ تَبِعَنِىۡ فَاِنَّهٗ مِنِّىۡ‌ۚ وَمَنۡ عَصَانِىۡ فَاِنَّكَ غَفُوۡرٌ رَّحِيۡمٌ‏

(३६) हे मेरो प्रभु ! उनीहरूले धेरै मानिसहरूलाई मार्गबाट विचलित गरेका छन् ।[2] अब मेरो अनुयायी मेरो छ तथा जसले अवज्ञा गऱ्यो त निश्चय नै तिमी बडो क्षमाशील अत्यन्त दयावान हौ ।

رَبَّنَاۤ اِنِّىۡۤ اَسۡكَنۡتُ مِنۡ ذُرِّيَّتِىۡ بِوَادٍ غَيۡرِ ذِىۡ زَرۡعٍ عِنۡدَ بَيۡتِكَ الۡمُحَرَّمِۙ رَبَّنَا لِيُقِيۡمُوا الصَّلٰوةَ

(३७) हे मेरा प्रभु ! मैले आफ्ना केही सन्तान[3] यस बाँझो वनमा तिम्रो पवित्र घरको निकट बसाएको छु । हे मेरा प्रभु ! यो यसकारण ताकि उनीहरूले

[1]यस नगरसित तात्पर्य मक्का हो । अन्य दुआ (प्रार्थनाहरू) भन्दा पूर्व यो दुआ गरे कि यसलाई शान्तिमय बनाइदेउ, यसकारण कि शान्ति हुन्छ भने मानिसहरू अन्य उपकारहरूवाट पनि सहीह रूपमा लाभान्वित हुनसक्ने छन् । अन्यथा शान्ति न हुँदा सवै सुख-सुविधाहरूका बावजूद भय, आतङ्कको छायाँ मनुष्यलाई व्यग्र एवं व्याकुल राख्दछ । जस्तो कि आजकलको सामान्य समाजको दशा छ, सउदी अरवका अतिरिक्त । त्यहाँ यस दुआको प्रभावले तथा इस्लामी नियमहरू लागू भएका हुनाले, आज पनि शान्तिको एउटा उदाहरण विद्यमान छ । यहाँ अल्लाहका पुरस्कारहरू अर्न्तगत यसलाई वर्णन गरेर संकेत गरिदियो कि कुरैश जहाँ अल्लाहका अन्य पुरस्कारवाट अपेक्षित छन् यस विशेष अनुकम्पासित पनि अन्जान छन् कि उसले उनीहरूलाई मक्का जस्तो शान्ति भएको नगरको बासिन्दा बनायो ।

[2]विचलन गराउनुको सम्वन्ध ती पत्थरका मूर्तिहरूसँग सम्बन्धित गऱ्यो, जसलाई मूर्तिपूजक पूज्दथे, यस उपरान्त कि उनीहरू निबोध छन्, किनभने ती विचलनका कारण थिए तथा छन् ।

[3](مِنۡ ذُرِّيَّتِىۡ) मा (مِنۡ) 'केही' को लागि हो अर्थात् केही सन्तानहरू भन्दछन् कि आदरणीय इब्राहीमका विभिन्न पत्नीहरूबाट आठ पुत्र थिए, जसमध्ये केवल आदरणीय इस्माईललाई यहाँ बसोबास गराए । (फ़तहुल क़दीर)

فَاجْعَلْ أَفْئِدَةً مِّنَ النَّاسِ تَهْوِيٓ إِلَيْهِمْ وَارْزُقْهُم مِّنَ الثَّمَرَاتِ لَعَلَّهُمْ يَشْكُرُونَ ﴿٣٧﴾

नमाज़ स्थापित गरून् ।[1] अत: तिमीले केही मानिसहरूका[2] हृदयलाई उनीतिर आकर्षित गरिदेउ ।[3] तथा उनीहरूलाई फलहरूको जीविका प्रदान गर ताकि उनीहरूले कृतज्ञता व्यक्त गरून् ।

رَبَّنَآ إِنَّكَ تَعْلَمُ مَا نُخْفِي وَمَا نُعْلِنُ ۗ وَمَا يَخْفَىٰ عَلَى اللَّهِ مِن شَيْءٍ فِي الْأَرْضِ وَلَا فِي السَّمَآءِ ﴿٣٨﴾

(३८) हे हाम्रो प्रभु ! तिमी राम्ररी जान्दछौ जे हामी लुकाउँदछौ तथा जे व्यक्त गर्दछौं । धर्ती तथा आकाशमा भएको कुनै कुरा अल्लाहबाट लुकेको छैन ।[4]

الْحَمْدُ لِلَّهِ الَّذِي وَهَبَ لِي عَلَى الْكِبَرِ إِسْمَاعِيلَ وَإِسْحَاقَ ۚ إِنَّ رَبِّي لَسَمِيعُ الدُّعَآءِ ﴿٣٩﴾

(३९) अल्लाहलाई प्रशंसा छ, जसले मलाई बृद्धावस्थामा इस्माईल तथा इसहाक़ प्रदान गऱ्यो, नि:सन्देह मेरो प्रभु (अल्लाह) प्रार्थनाहरू सुन्दछ ।

---

[1]इबादतहरू (आराधनाहरू) मध्ये मात्र नमाज़को चर्चा गरे, जसबाट नमाज़को महत्व स्पष्ट हुन्छ ।

[2]यहाँ पनि (مِنْ) 'केही' को लागि छ, कि केही मानिसहरू, यसबाट तात्पर्य मुसलमान हुन् । अत: हेरिहाल्नुस् कि कुन प्रकार संसारभरिका मुसलमान मक्कामा एकत्रित हुन्छन् तथा हज्ज बाहेक पूरा वर्षभरि यो क्रम निरन्तर बनिरहन्छ । यदि आदरणीय इब्राहीम (أفئدة النّاس) मानिसहरूका हृदय) भनेको भए त इसाई, यहूदी, अग्निपूजक तथा अन्य सबै मानिसहरू मक्का पुग्थे । (مِنَ النّاس) को (مِنْ) ले यस दुआलाई मुसलमानहरूसम्म सीमित गरिदियो । (इब्ने क़सीर)

[3]यस दुआ़को प्रभाव पनि हेरिहालियोस् कि मक्काजस्तो निर्जल ठाउँमा जहाँ कुनै फलदार वृक्ष छैन, संसारभरिका फल अधिक मात्रामा उपलब्ध छन् तथा हज़को अवसरमा पनि जबकि लाखौं मानिसहरू पुग्दछन्, फलको प्रशस्ततामा कुनै कमी आउँदैन ।

भनिन्छ कि यो दुआ ख़ाना-ए-काअ़बाको निर्माणको पश्चात माँगे, जबकि प्रथम दुआ (शान्तिमय बनाइदेउ) त्यसबेला माँगे जब आफ्नी पत्नी नवजात शिशु इस्माईललाई अल्लाह तआ़लाको आदेशमा त्यहाँ छाडेर गईहाल्यो । (इब्ने क़सीर)

[4]तात्पर्य यो हो कि मेरो दुआ़को उद्देश्य तिमी राम्ररी जान्दछौ, यस नगरवालाहरूका लागि दुआबाट मूल उद्देश्य तिम्रो पसन्नता हो, तिमी त प्रत्येक कुराको वास्तविकतालाई राम्ररी जान्दछौ । आकाश तथा धर्तीको कुनै कुरो तिमीबाट लुकेको छैन ।

(४०) हे मेरा प्रभु ! मलाई र मेरा सन्तानलाई पनि[1] नमाज़ कायम गर्ने बनाइदेउ,[2] हे मेरा प्रभु ! मेरो प्रार्थना स्वीकार गर ।

رَبِّ اجْعَلْنِي مُقِيمَ الصَّلَاةِ وَمِن ذُرِّيَّتِي ۚ رَبَّنَا وَتَقَبَّلْ دُعَاءِ ﴿٤٠﴾

(४१) हे हाम्रा प्रभु ! मलाई क्षमा प्रदान गर तथा मेरा माता-पितालाई पनि क्षमा गरिदेउ तथा अन्य ईमान भएकाहरूलाई पनि क्षमा गरिदेऊ जुन दिन हिसाब हुनेछ ।

رَبَّنَا اغْفِرْ لِي وَلِوَالِدَيَّ وَلِلْمُؤْمِنِينَ يَوْمَ يَقُومُ الْحِسَابُ ﴿٤١﴾

(४२) अन्यायीहरूका कर्मबाट अल्लाहलाई अन्जान नठान, त्यसले त उनीहरूलाई त्यस दिनसम्म अवसर दिएको छ, जुन दिन आँखा चकित भई खुल्ला रहनेछन् ।[3]

وَلَا تَحْسَبَنَّ اللَّهَ غَافِلًا عَمَّا يَعْمَلُ الظَّالِمُونَ ۚ إِنَّمَا يُؤَخِّرُهُمْ لِيَوْمٍ تَشْخَصُ فِيهِ الْأَبْصَارُ ﴿٤٢﴾

[1]आफूसँग आफ्नो सन्तानको लागि पनि दुआ माँगे, जस्तो यसभन्दा पूर्व पनि आफूसँग आफ्नो सन्तानको लागि पनि यो दुआ माँगे कि उनीहरूलाई मूर्तिहरूको पूजाबाट बचाएर राख्नु । यसबाट ज्ञात भयो कि अल्लाहको धर्मतिर निमन्त्रणा दिनेहरूलाई आफ्ना घरवालाहरूको मार्गदर्शन तथा उनको धार्मिक शिक्षा तथा प्रशिक्षणतिरबाट कहिले निश्चिन्त हुनुहुँदैन । जस्तो कि अल्लाह तआलाले आफ्नो अन्तिम पैगम्बर (ईशदूत) परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई पनि आदेश दियो ।

﴿وَأَنذِرْ عَشِيرَتَكَ الْأَقْرَبِينَ﴾

"आफ्ना नजीकका सम्बन्धिहरूलाई तर्साउनुस् ।" (सूरः अल-शोअराः-२१४)

[2]आदरणीय इब्राहीमले यो दुआ त्यस समय गरे जबकि अझै उनलाई आफ्नो पिता अल्लाहको शत्रु हुने कुरो विदित भएको थिएन, जब यो स्पष्ट भइहाल्यो कि मेरो पिता अल्लाहको शत्रु हो त त्यसबाट आफूलाई अलग्ग गरिहाले, यसकारण कि मूर्तिपूजकको लागि मोक्ष तथा क्षमाको दुआ गर्नु उचित छैन, चाहे त्यो जति घनिष्ट अथवा निकटवर्ती किन नहोस् ?

[3]अर्थात् केयामतको भयानकताको कारण । यदि संसारमा अल्लाहले कसैलाई अधिक अवसर प्रदान गरिदियो तथा त्यसको मृत्युसम्म त्यसको पकड गरेन भने केयामतका दिन अल्लाहको हिसाब किताबबाट त्यो बच्नसक्ने छैन, जुन काफ़िरहरूका लागि यति भयानक हुनेछन् कि आँखाहरू छक्क परेर खुलै रहन्छन् ।

مُهْطِعِيْنَ مُقْنِعِيْ رُءُوْسِهِمْ لَا يَرْتَدُّ اِلَيْهِمْ طَرْفُهُمْ ۚ وَ اَفْـِٕدَتُهُمْ هَوَآءٌ ﴿٤٣﴾

(४३) उनीहरूले आफ्ना टाउका उचाली भागदौड गरिराखेका हुनेछन् ।[१] स्वयं आफूतिर पनि उनका दृष्टि फर्कने छैनन् तथा उनका हृदय ठूलो शून्यताले भरिएका हुनेछन् ।[२]

وَ اَنْذِرِ النَّاسَ يَوْمَ يَاْتِيْهِمُ الْعَذَابُ فَيَقُوْلُ الَّذِيْنَ ظَلَمُوْا رَبَّنَاۤ اَخِّرْنَاۤ اِلٰۤى اَجَلٍ قَرِيْبٍ ۙ نُّجِبْ دَعْوَتَكَ وَ نَتَّبِعِ الرُّسُلَ ؕ اَوَ لَمْ تَكُوْنُوْۤا اَقْسَمْتُمْ مِّنْ قَبْلُ مَا لَكُمْ مِّنْ زَوَالٍ ۙ﴿٤٤﴾

(४४) तथा मानिसहरूलाई त्यस दिनबाट सतर्क गराइदेउ, जब उनीहरूलाई यातना उनको निकट आइहाल्ने छ तथा अत्याचारीहरूले भन्नेछन् कि हे हाम्रो प्रभु ! हामीलाई अलिकति मोहलतको अवसर प्रदान गरिदेउ ताकि हामी तिम्रो निमन्त्रणा मान्न सका तथा तिम्रा पैगम्बरहरूको अनुसरणमा लागौं । के तिमी यसभन्दा पहिला पनि कसमहरू खाने गर्दैनथ्यो कि हाम्रो त पतन नै हुनेछैन ?[३]

وَّ سَكَنْتُمْ فِيْ مَسٰكِنِ الَّذِيْنَ ظَلَمُوْۤا اَنْفُسَهُمْ وَ تَبَيَّنَ لَكُمْ كَيْفَ فَعَلْنَا بِهِمْ وَ ضَرَبْنَا لَكُمُ الْاَمْثَالَ ﴿٤٥﴾

(४५) तथा के तिमी ती मानिसहरूका घरमा बस्ने गर्दैनथ्यौ जसले आफ्ना प्राणमाथि अत्याचार गरे तथा के तिमीलाई त्यो कुरा स्पष्ट भएन कि हामीले उनीसँग के कस्तो कुरा गर्‍यौं ?

---

[१](مُهْطِعِيْنَ) तिव्र गतिले दौडिराखेका हुनेछन्, अन्य स्थानमा भन्यो :

﴿ مُّهْطِعِيْنَ اِلَى الدَّاعِ ﴾

"वोलाउनेतिर दगुर्नेछन् ।" (सूर: अल-कमर-८)

(مقنعي رءوسهم) "आश्चर्य उनको टाउको ठाडो हुनेछन् ।"

[२]जुन भयानकता उनले देख्ने छन् तथा जुन चिन्ता तथा भय आफ्नो विषयमा उनलाई हुनेछ, तिनका कारण तिनीहरूका आँखा एक क्षणका लागि झुक्ने छैनन् तथा भयको अधिकताको कारण हृदय निराश तथा शून्य हुनेछन् ।

[३]अर्थात् संसारमा तिमी सौगन्ध खाएर भन्ने गर्थ्यौ कि कुनै हिसाब-किताब तथा स्वर्ग-नर्क छैन तथा पुन: कसलाई जीवित हुनुछ ।

हामीले त तिमीलाई बुझाउनलाई धेरै उदाहरणको वर्णन गर्यौं ।[1]

(४६) तथा यिनी आफ्ना चाल चलिराखेका छन् तथा अल्लाहलाई उनका सबै चालहरूको ज्ञान छ ।[2] उनका चालहरू यस्ता थिएनन् कि तिनीबाट पर्वत आफ्नो ठाउँबाट विस्थापित होऊन् ।[3]

وَقَدْ مَكَرُوا مَكْرَهُمْ وَعِنْدَ اللَّهِ مَكْرُهُمْ ۖ وَإِنْ كَانَ مَكْرُهُمْ لِتَزُولَ مِنْهُ الْجِبَالُ ﴿٤٦﴾

(४७) तपाईं ले कदापि यो विचार नगर्नुस् कि अल्लाह आफ्ना नबीहरूसित वचन विरूद्ध

فَلَا تَحْسَبَنَّ اللَّهَ مُخْلِفَ وَعْدِهِ رُسُلَهُ ۗ إِنَّ اللَّهَ عَزِيزٌ ذُو انْتِقَامٍ ﴿٤٧﴾

[1]अर्थात् शिक्षा ग्रहण गर्नेको लागि हामीले त ती विगत समुदायहरूका घटनाहरूको वर्णन गरिदिएका छौं, जसका घरहरूमा अब तिमी निवास गर्दछौ तथा तिनका भग्नावशेष पनि तिमीलाई विचार तथा चिन्तनको आमन्त्रण दिइराखेका छन् । यदि तिमी उनीबाट शिक्षा ग्रहण गर्दैनौं तथा तिनका परिणामबाट बच्न प्रयत्न गर्दैनौं भने तिम्रो इच्छा हो । अनि तिमी पनि त्यसै परिणामका लागि तैयार रह ।

[2]यो वचन अवस्थाको वाचक हो कि हामीले उनीसँग जे गर्यौं त्यो गर्यौं जबकि उनीहरूले अनृतलाई सिद्ध तथा सत्यको खण्डनका लागि विभिन्न प्रकारका वहाना तथा छल गरे तथा अल्लाहलाई ती सबै चालहरूको ज्ञान छ अर्थात् उसित लेखिएको छ जसको त्यसले उनीहरूलाई प्रतिफल दिनेछ ।

[3]किनभने यदि पर्वत विचलित भएका भए त आफ्ना स्थानमा हुन्नथे, जबकि सबै पर्वत श्रृङ्खलाहरू आफ्ना स्थानमा छन् । यो इन्कारको लागि हो । अर्को अर्थ (إن مخففة من المثقلة) का लागि गएका छन् अर्थात् नि:सन्देह उनका छल त यदि ठूला थिए कि पर्वत पनि आफ्ना स्थलबाट विचलित हुन्थे । यो त अल्लाह तआला नै हो जसले उनका छलहरूलाई सफल हुन दिएन । जस्तो कि मूर्तिपूजकहरूको मूर्तिपूजनको विषयमा अल्लाह तआलाले भने :

﴿تَكَادُ السَّمَوَاتُ يَتَفَطَّرْنَ مِنْهُ وَتَنْشَقُّ الْأَرْضُ وَتَخِرُّ الْجِبَالُ هَدًّا ۞ أَنْ دَعَوْا لِلرَّحْمَٰنِ وَلَدًا﴾

"निकट छ कि आकाश फाटिहालोस् धर्तीमा चिरा पर्न जाओस् तथा पर्वत कण-कण भएर जाओस् । यस कुरामाथि कि उनीहरूले भने अल्लाह दयालुको सन्तान छ ।" (सूर: मरियम-९० तथा ९१)

गर्नेछ ।[1] अल्लाह अत्यन्त प्रभावशाली तथा बदला लिन शक्तिशाली छ ।[2]

(४८) जुन दिन धर्ती यस धर्तीका अन्य कुरामा नै परिवर्तित गरिने छ तथा आकाशहरुलाई पनि, तथा[3] सबै एकमात्र अल्लाह प्रभावशाली सम्मुख हुनेछन् ।

يَوْمَ تُبَدَّلُ الْأَرْضُ غَيْرَ الْأَرْضِ وَالسَّمٰوٰتُ وَبَرَزُوْا لِلّٰهِ الْوَاحِدِ الْقَهَّارِ ﴿٤٨﴾

(४९) तथा तपाईंले त्यस दिन पापीहरूलाई देख्नुहुनेछ कि जंजीरहरूमा एक साथ ज़कडिएका हुनेछन् ।

وَتَرَى الْمُجْرِمِيْنَ يَوْمَئِذٍ مُّقَرَّنِيْنَ فِي الْأَصْفَادِ ﴿٤٩﴾

[1]अर्थात् अल्लाहले आफ्ना रसूलहरूसित संसार तथा परलोकमा सहायता गर्नुको जुन प्रतिज्ञा गरेको छ, त्यो नि:सन्देह सत्य छ, त्यसबाट वचनको विरोध सम्भव छैन ।

[2]अर्थात् आफ्ना मित्रहरूका लागि आफ्ना शत्रुहरूसित बदला लिन शक्तिशाली छ ।

[3]इमाम शौकानीको मत छ कि आयतमा दुबै सम्भावनाहरू छन् कि यो परिवर्तन विशेषताहरूको आधारले होस् अथवा अस्तित्वको आधारमा । अर्थात् यस आकाश तथा धर्तीका गुण परिवर्तित हुनेछन् अथवा त्यसै अस्तित्व बदलिहाल्नेछ, न यो धर्ती रहनेछ, न यो आकाश । धर्ती पनि कुनै अन्य हुनेछ तथा आकाश पनि कुनै अन्य । हदीसमा वर्णित छ, रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

يُحْشَرُ النَّاسُ يَوْمَ الْقِيَامَةِ عَلَى أَرْضٍ بَيْضَاءَ عَفْرَاءَ، كَقُرْصَةِ النَّقِيِّ لَيْسَ فِيهَا عَلَمٌ لِأَحَدٍ

"केयामतका दिन मानिसहरू खैरो-सेतो धर्तीमा एकत्रित हुनेछन्, जुन मैदाको रोटीजस्तो हुनेछ । त्यसमा कसैको कुनै झगडा (अथवा प्रतीकको रूपमा चिन्ह) हुनेछैन ।" (सहीह मुस्लिम सिफ़तुल कियाम: बाबुन नफ़िल वअ्से वन्नोशूर)

आदरणीय आयशाले सोध्नुभयो कि जब यी आकाश धर्ती परिवर्तित भइहाल्नेछन् त मानिसहरू त्यस दिन कहाँ हुनेछन् । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : सिरातमा अर्थात "पुल सिरात" मा । "मानिसहरू त्यस दिन पुल सिरातका निकट अँध्यारोमा हुनेछन् ।" (सहीह मुस्लिम किताबुल हैज़ बाब बयान सिफ़ते मनीयिर्रजुले)

سَرَابِيلُهُم مِّن قَطِرَانٍ وَتَغْشَىٰ وُجُوهَهُمُ النَّارُ ۝٥٠

(५०) उनका वस्त्रहरू गन्धकका हुनेछन्[1] तथा आगोले उनका मुखलाई ढाकेको हुनेछ ।

لِيَجْزِيَ اللَّهُ كُلَّ نَفْسٍ مَّا كَسَبَتْ ۚ إِنَّ اللَّهَ سَرِيعُ الْحِسَابِ ۝٥١

(५१) यो यसकारण कि अल्लाह (तआला) प्रत्येक व्यक्तिलाई उसले गरेका कर्महरूको प्रतिफल देओस् । निःसन्देह अल्लाह (तआला) लाई हिसाब लिन बेर लाग्ने छैन ।

هَٰذَا بَلَاغٌ لِّلنَّاسِ وَلِيُنذَرُوا بِهِ وَلِيَعْلَمُوا أَنَّمَا هُوَ إِلَٰهٌ وَاحِدٌ وَلِيَذَّكَّرَ أُولُو الْأَلْبَابِ ۝٥٢

(५२) यो कुरआन[2] सबै मानिसहरूको लागि सूचनापत्र हो कि यसद्धारा उनीहरूलाई सतर्क गरियोस् तथा पूर्णरुपले ज्ञात होस् कि अल्लाह एक मात्र पूजनीय हो तथा बुद्धिमानहरु सोच्न-बुझ्न सकून् ।

## سُورَةُ الْحِجْرِ

## सूरतुल हिज्र -१५

सूरः अल-हिज्र मक्कामा उत्रेको तथा यसमा ९९ आयतहरू एवं ६ रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

शुरु गर्दछु अल्लाहको नामबाट जो अत्यन्त कृपालु एवं अत्यन्त दयालु छ ।

الر ۚ تِلْكَ آيَاتُ الْكِتَابِ وَقُرْآنٍ مُّبِينٍ ۝١

(१) अलिफ. लाम. रा. यी (अल्लाह को) कितावका आयतहरू हुन् तथा खुल्ला एवं प्रकाशमान कुरआनका ।[3]

---

[1]जो आगोवाट तुरुन्तै भड्किन्छ । यसको अतिरिक्त आगोले उनीहरूको मुखलाई पनि छोपेको हुनेछ ।

[2]यो संकेत कुरआन तिर हो अथवा पछाडिको वृतान्त तिर जो (وَلَا تَحْسَبَنَّ اللَّهَ غَافِلًا) द्वारा वर्णन गरिएको छ ।

[3]किताब तथा कुरआन मोबीन बाट तात्पर्य कुरआन करीम नै हो जो नबी करीम सल्लल्लाहु अलैहि वसल्लममाथि अवतरित भयो ।

رُبَمَا يَوَدُّ الَّذِينَ كَفَرُوا لَوْ كَانُوا مُسْلِمِينَ ②

(२) त्यो पनि समय हुनेछ जब काफ़िरहरु आफू मुसलमान हुनुको कामना गर्नेछन् ।[1]

ذَرْهُمْ يَأْكُلُوا وَيَتَمَتَّعُوا وَيُلْهِهِمُ الْأَمَلُ فَسَوْفَ يَعْلَمُونَ ③

(३) तपाईंले उनीहरूलाई खाएको, लाभ उठाएको तथा (झूटा) आशाहरूमा लीन भएको अवस्थामा छाडिदिनुस्, उनीहरूले अहिले स्वयं थाहा पाइ हाल्नेछन् ।[2]

وَمَا أَهْلَكْنَا مِنْ قَرْيَةٍ إِلَّا وَلَهَا كِتَابٌ مَعْلُومٌ ④

(४) तथा कुनै बस्तीलाई हामीले ध्वस्त गरेनौं, परन्तु यो कि त्यसको लागि निर्धारित लेख थियो ।

مَا تَسْبِقُ مِنْ أُمَّةٍ أَجَلَهَا وَمَا يَسْتَأْخِرُونَ ⑤

(५) कुनै समूह आफ्नो मृत्युभन्दा न अगाडी बढ्दछ, न पछाडी रहन्छ ।[3]

وَقَالُوا يَا أَيُّهَا الَّذِي نُزِّلَ عَلَيْهِ الذِّكْرُ إِنَّكَ لَمَجْنُونٌ ⑥

(६) तथा उनीहरूले भने कि हे त्यो व्यक्ति ! जसमाथि कुर्आन अवतरित गरिएको छ, तिमी त अवश्य कुनै पागल हौ ।

---

[1]यो कामना कहिले गर्नेछन् ? मृत्युको समय, जब फरिश्ताहरूले उनीहरूलाई नरकको आगो देखाउँछन् अथवा जब नरकमा गइहाल्नेछन् अथवा त्यस समय जब पापी निष्ठावानहरूलाई केही समय नरकमा राखेर त्यस पश्चात उनीहरूलाई त्यहाँबाट निकालिनेछ अथवा महशरको मैदानमा जहाँ लेखा-जोखा भइराखेको हुनेछ तथा काफिर देख्नेछन् कि मुसलमानहरू स्वर्गमा गइराखेका छन् त कामना गर्नेछन् कि काश ! उनीहरू पनि मुसलमान भएको भए (رُبما) को अर्थ त वास्तवमा अधिकता हो तर कहिले काँही कमीको लागि पनि प्रयोग हुन्छ । केही विद्वानहरू भन्छन् कि उनको यो कामना प्रत्येक अवसरमा भइरहने छ, तर त्यसको उनीहरूलाई कुनै लाभ हुने छैन ।

[2]यो धम्की तथा हप्काई हो कि यी काफिर (अधर्मी) तथा मूर्तिपूजक (बहुदेववादी) आफ्नो कुफ्र तथा मूर्तिपूजनबाट रोकिंदैनन् भने उनलाई छाडिदिनुस्, यिनी सांसारिक सुखको भोग गरून् तथा आफ्ना आशाहरूको पूर्ति गरुन् । निकट भविष्यमा उनीहरूलाई आफ्नो कुफ्र तथा मूर्तिपूजनको परिणाम ज्ञात भइहाल्नेछ ।

[3]जुन बस्तीलाई पनि अवज्ञाका कारण ध्वस्त गर्दछौं, त शीघ्र नै गर्दैनौं, बरु हामीले एक समय निर्धारित गरेका छौं, त्यस समयसम्म, त्यस बस्तीवालाहरूलाई अवसर प्रदान गरिन्छ, तर जब त्यो निर्धारित समय आइपुग्छ, तब उनीहरूलाई नष्ट गरिदिइन्छ अनि उनीहरू त्यसबाट अगाडी अथवा पछाडी हुँदैनन् ।

لَوْمَا تَأْتِينَا بِالْمَلَٰئِكَةِ إِن كُنتَ مِنَ الصَّٰدِقِينَ ⑦

(७) यदि तिमी साँचो हौ भने हाम्रो पासमा फरिश्ताहरू (स्वर्गदूत) किन ल्याउँदैनौ ?[1]

مَا نُنَزِّلُ الْمَلَٰئِكَةَ إِلَّا بِالْحَقِّ وَمَا كَانُوا إِذًا مُّنظَرِينَ ⑧

(८) हामीले फरिश्ताहरूलाई सत्यका साथ नै अवतरित गर्दछौं तथा त्यस समय उनीहरू अवसर दिइएका हुँदैनन् ।[2]

إِنَّا نَحْنُ نَزَّلْنَا الذِّكْرَ وَإِنَّا لَهُ لَحَٰفِظُونَ ⑨

(९) निःसन्देह हामीले नै यस कुर्आनलाई अवतरित गरेका हौं तथा हामी नै यसका रक्षक हौं ।[3]

[1]यो काफ़िरहरूका कुफ़्र तथा वैरभावको वर्णन हो कि उनी नबी सल्लल्लाहु अलैहि वसल्लमलाई दीवाना भन्दछन् तथा यो पनि भन्छन् कि यदि तिमी (हे मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम) साँचो हौ भने आफ्नो अल्लाहसित भन कि त्यसले फरिश्ताहरूलाई हाम्रो पासमा पठाईदेओस् ताकि उनीहरू तिम्रो रिसालतको पुष्टि गरून् अथवा हामीलाई नष्ट गरिदेऊन् ।

[2]अल्लाह तआलाले भन्नुभयो कि हामीहरू फरिश्ताहरूलाई सत्यका साथ पठाउँछौं अर्थात जब हाम्रो नीति तथा इच्छा यातना पठाउनुको हुन्छ, त फरिश्ताहरू धर्तीमा अवतरित हुन्छन् । तथा त्यसपछि उनीहरूलाई (काफिर) अवसर दिइँदैनन् तुरुन्त नाश गरिन्छन् ।

[3]अर्थात् उसलाई युगको हस्तक्षेपबाट तथा परिवर्तनबाट सुरक्षित राख्नु हाम्रो काम हो । अतः कुर्आन आज सम्म त्यसैप्रकार सुरक्षित छ, जुनप्रकार अवतरित भएको थियो, विचलित भएका समूह आ-आफ्ना विचारहरूका आधारमा भएको थियो, विचलित भएका समूह आ-आफ्ना विचारहरूका आधारमा त्यसका अर्थमा त परिवर्तन गर्देआइरहेका छन् तथा आज पनि गर्दछन्, तर पूर्वका आकाशीय पुस्तकहरूको जस्तो शाब्दिक परिवर्तन अथवा कमी एवं अधिकतावाट सुरक्षित छ । यसका अतिरिक्त प्रत्येक समयमा सत्यवादीहरूको एउटा समूहले यस अर्थ परिवर्तनको विरोध गरेको छ तथा ती अर्थमा परिवर्तन गर्नेवालाहरूको रुपबाट पर्दा हटाएर वास्तविक रुप समाजका समक्ष प्रस्तुत गर्दैरहेको तथा आज पनि यस क्षेत्रमा सक्रिय छ । यसका अतिरिक्त कुर्आनको लागि (ذكر) (शिक्षा) को शव्द प्रयोग गरिएको छ, जसबाट ज्ञात हुन्छ कि कुर्आन सम्पूर्ण संसारका मानिसहरूका लागि (ذكر) (सतर्क गर्ने तथा शिक्षाप्रद हुने पक्षलाई नबी सल्लल्लाहु अलैहि वसल्लमको जीवन-चरित्रका प्रकाशमयी चित्रहरू तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमका कथनहरूलाई पनि सुरक्षित गरेर, कयामतसम्मका लागि शेष राखिएको छ । अतः कुर्आन करीम तथा नबी सल्लल्लाहु अलैहि वसल्लमको जीवन चरित्रद्वारा मानिसहरूलाई इस्लामको आमन्त्रण दिनुको मार्ग सधैंका लागि खुला छ । यो सम्मान तथा सुरक्षाको स्थान पूर्वका आकाशीय पुस्तक तथा रसूलहरूलाई प्राप्त भएन ।

(१०) तथा हामीले तपाईंभन्दा पहिलाका समुदायहरूमा पनि आफ्ना रसूल (निरन्तर) पठायौं ।

وَلَقَدْ أَرْسَلْنَا مِن قَبْلِكَ فِي شِيَعِ الْأَوَّلِينَ ﴿١٠﴾

(११) तथा (तर) जुन पनि रसूल (संदेशवाहक) आउँथ्यो, तिनीहरूले तयसको उपहास गर्दथे ।[१]

وَمَا يَأْتِيهِم مِّن رَّسُولٍ إِلَّا كَانُوا بِهِ يَسْتَهْزِءُونَ ﴿١١﴾

(१२) पापीहरूका हृदयमा हामीले यसैप्रकार यही रचाउने गर्दछौं ।[२]

كَذَٰلِكَ نَسْلُكُهُ فِي قُلُوبِ الْمُجْرِمِينَ ﴿١٢﴾

(१३) उनीहरूले यसलाई मान्ने छैनन् तथा निःसन्देह विगत मानिसहरूको (यस्तै) आचरण (व्यतीत) भएको छ ।[३]

لَا يُؤْمِنُونَ بِهِ وَقَدْ خَلَتْ سُنَّةُ الْأَوَّلِينَ ﴿١٣﴾

(१४) तथा यदि हामीले उनीमाथि आकाशबाट कुनै द्वार खोलि पनि दिऔं तथा यिनीहरू त्यहाँ चढ्न थालून् ।

وَلَوْ فَتَحْنَا عَلَيْهِم بَابًا مِّنَ السَّمَاءِ فَظَلُّوا فِيهِ يَعْرُجُونَ ﴿١٤﴾

(१५) तैपनि उनीहरूले यही भन्नेछन् कि हामीलाई दृष्टिबन्द गरिदिइएको छ, बरु हामीहरूमाथि जादू गरिदिइएको छ ।[४]

لَقَالُوا إِنَّمَا سُكِّرَتْ أَبْصَارُنَا بَلْ نَحْنُ قَوْمٌ مَّسْحُورُونَ ﴿١٥﴾

[१]यहाँ कि नवी सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिइंदैछ कि केवल तपाईंलाई नै झुट्लाइएन, प्रत्येक रसूलसँग त्यसको समुदायले यही व्यवहार गरेको छ ।

[२]अर्थात् यो कुफ्र तथा रसूलहरूको उपहास हामीले अपराधीहरूका दिलमा हालिदिन्छौं अथवा वसालिदिन्छौ, यो सम्बन्ध अल्लाह तआलाले आफूतिर यसकारण गरेको छ कि प्रत्येक कुराको स्रष्टा अल्लाह तआला नै हो, यद्यपि उनको यो कर्म उनका निरन्तर व्यवहारका परिणामस्वरुप अल्लाहकै इच्छाले उत्पन्न भएको होस् ।

[३]अर्थात उनलाई नष्ट गर्नुको त्यही साधन हो, जुन अल्लाहले अघिदेखि नै निर्धारित गरेको छ कि झुट्लाउनु तथा उपहास गर्नुका पश्चात समुदायहरूलाई नष्ट गर्दै आइरहेको छ ।

[४]अर्थात् उनको कुफ्र तथा वैरभाव त्यस सीमासम्म बढेको छ कि फरिश्ताहरूको अवतरण हुनु त एकातिर, यदि स्वयं उनका लागि आकाशका द्वारहरू खोलिन्छन् तथा यिनी ती द्वारहरूबाट आकाशमा आईहालून् तैपनि उनलाई आफ्ना आँखामाथि विश्वास हुनेछैन तथा रसूलहरूलाई मान्ने छैनन्, बरु यो भन्नेछन् कि हाम्रो नज़रबन्दी गरिदिइएको छ अथवा हामीमाथि जादू गरिदिइएको छ,

(१६) तथा निःसन्देह हामीले आकाशमा ग्रह समूह बनाएका छौं,[1] तथा अवलोकन गर्नेहरूका लागि यसलाई शोभामान गरेका छौं ।

وَلَقَدْ جَعَلْنَا فِي السَّمَاءِ بُرُوجًا وَزَيَّنَّاهَا لِلنَّاظِرِينَ ۝١٦

(१७) तथा त्यसलाई प्रत्येक धिक्कृत शैतानबाट सुरक्षित राखेका छौं ।[2]

وَحَفِظْنَاهَا مِن كُلِّ شَيْطَانٍ رَّجِيمٍ ۝١٧

(१८) हो, जो लुकिछिपी सुन्न प्रयत्न गर्दछ

إِلَّا مَنِ اسْتَرَقَ السَّمْعَ فَأَتْبَعَهُ

जसको कारण हामीले यस्तो आभास गरिराखेका छौं कि हामी आकाशमा गईराखेका छौं । जबकि यस्तो छैन ।

[1] (بروج) बहुवचन हो (برج) को, जसको अर्थ प्रत्यक्ष अथवा प्रकाशित हुनु हो । यसैबाट (تبرج) छ, जुन स्त्रीको श्रृङ्गार प्रदर्शनको अर्थमा प्रयोग हुन्छ । यहाँ आकाशका ताराहरू, ग्रहहरूलाई (بروج) भनिएको छ किनभने ती पनि उच्च तथा प्रत्यक्ष हुन्छन् । केही विद्वान यो भन्दछन् कि (بروج) सित तात्पर्य सूर्य तथा चन्द्रमा तथा अन्य ग्रहहरूका ती कलाहरू, गतिहरू हुन्, जुन उनका लागि निर्धारित छन् तथा यिनी बाह्रवटा छन्, कुम्भ, मेष, कर्क, मकर, मिथुन, सिंह, तुला, मंगल, शनि, वृश्चिक, वृष तथा कन्या । अरबका मानिस यी ग्रहहरूका कला तथा उनीद्वारा ऋतुको स्थिति ज्ञात गर्दथे । तर उनीद्वारा अनहोनी, घटित हुने घटनाहरूको ज्ञानको दावी गर्नु, जस्तो कि आजभोलि पनि अशिक्षितहरूमा यसको विशेष प्रचलन छ । तथा मानिसहरूको भाग्यलाई उनीद्वारा हेरिन्छ तथा बुझिन्छ, यद्यपि उनका सम्बन्ध संसारमा हुन लागेका घटनाहरूसित हुँदैन । जे-जति पनि हुन्छ, त्यो अल्लाहको आदेशले हुन्छ । अल्लाह तआलाले यी ग्रहहरूको वर्णन आफ्नो सामर्थ्य तथा अनुपम कारीगरीको रूपमा गरेको छ । यसको अतिरिक्त यो पनि स्पष्ट गरेको छ कि यिनी आकाशको शोभा पनि हुन् ।

[2] رجيم 'مرجوم' को अर्थमा छ, ढुङ्गा हान्नु । शैतानलाई रजीम यसकारण भनिएको छ कि त्यो जतिखेर पनि आकाशतिर जान प्रयत्न गर्दछ, आकाशबाट 'शहाब साक़िब' (उल्का) त्यसमाथि भाँचिएर खस्छन् । अनि रजीम धिक्कृत तथा नराम्रोको अर्थमा पनि प्रयोग हुन्छ किनभने जसलाई ढुङ्गाहरूले हानिन्छ, त्यसलाई प्रत्येकतिर बाट धिक्कारिन्छ तथा नराम्रो पनि भनिन्छ । यहाँ अल्लाह तआलाले यही भन्नुभएको छ कि हामीले आकाशहरूको प्रत्येक शैतान रजीमबाट सुरक्षा गरेका छौं, अर्थात् यी ताराहरूद्वारा किनभने यिनी शैतानलाई हान्दछन् तथा त्यसलाई भाग्न विवश गरिदिन्छन् ।

شِهَابٌ مُّبِينٌ ⑱

त्यसको पछाडी प्रज्वलित (खुल्ला) ज्वाला लाग्दछ ।[1]

وَالْأَرْضَ مَدَدْنَاهَا وَأَلْقَيْنَا فِيهَا رَوَاسِيَ وَأَنبَتْنَا فِيهَا مِن كُلِّ شَيْءٍ مَّوْزُونٍ ⑲

(१९) तथा धर्तीलाई हामीले विस्तारित गरेका छौं तथा त्यसमाथि (अटल) पर्वत स्थापित गरेका छौं । तथा त्यसमा हामीले प्रत्येक कुरो निश्चित मात्रामा उमारेका छौं ।[2]

وَجَعَلْنَا لَكُمْ فِيهَا مَعَايِشَ وَمَن لَّسْتُمْ لَهُ بِرَازِقِينَ ⑳

(२०) तथा त्यसैमा हामीले तिम्रा जीविकाहरू बनाएका छौं,[3] तथा जसलाई तिमी जीविका प्रदान गर्ने होइनौं ।[4]

وَإِن مِّن شَيْءٍ إِلَّا عِندَنَا

(२१) तथा जति पनि कुराहरू छन्, सबैको कोष

[1]यसको अर्थ यो हो कि शैतान आकाशहरूमा कुरा सुन्न जान्छन्, जसमथि 'शहाव साकिव' (उल्का) चुँडेर खस्छन्, जसवाट केही त जलेर समाप्त हुन्छन् तथा केही वाँच्छन् एवं केही सुनेर आउँछन् । हदीसमा यसको व्याख्या यसप्रकार आएको छ । नवी सल्लल्लाहु अलैहि वसल्लम भन्नुहुन्छ, "जब अल्लाह तआला आकाशमा कुनै निर्णय गर्दछ, त फरिश्ताहरू त्यसलाई सुनेर आफ्ना पखेटाहरू फट्फटाउँछन् (भक्ति तथा विवशता प्रदर्शित गर्नको लागि) यस्तो लाग्छ कि त्यो कुनै चट्टानमाथि जंजीरको आवाज (ध्वनि) हो । अनि जव फरिश्ताहरूका हृदयवाट अल्लाहको भय समाप्त हुन्छ, त उनी एक-अर्कासित सोध्छन्, तिम्रो प्रभुले के भन्यो ? उनी भन्दछन् उसले जे भन्यो सत्य भन्यो तथा त्यो उच्च एवं महान छ । (त्यस पश्चात अल्लाहको त्यो निर्णय माथिदेखि तलसम्म एक पश्चात अर्कोलाई सुनाइन्छ) यस अवसरमा शैतान लुकेर कुरा सुन्दछन् । तथा यी लुकिछिपी सुन्ने शैतान अलि-अलि दूरीमा एक-अर्कामाथि हुन्छन् । तथा एकाध कुरा सुनेर आफ्ना मित्र ज्योतिषी तथा तान्त्रिकहरूका कानमा फुक्छन्, तिनीहरू त्योसित सयौं झूट कुरा मिसाएर मानिसहरूसित भन्दछन् । (सहीह बुख़ारी तफसीर सूर: अल-हिज्र)

[2](موزونٌ) को अर्थ ज्ञात अथवा अनुमानले अर्थात् आवश्यकता अनुसार ।

[3](معايش) वहुवचन हो (معيشة) । अर्थात् धर्तीमा तिम्रो जीवन निर्वाह तथा जीविकाका लागि अगणित वस्तुहरू तथा साधन पैदा गरिदियौं ।

[4]यसवाट तात्पर्य नोकर-चाकर, दास तथा पशु हुन् अर्थात पशुहरूलाई तिम्रो अधीन गरिदियौं जसमाथि तिमी यात्रा गर्दछौ, सामान पनि लादेर लैजान्छौ तथा उनलाई वध गरेर खान्छौ पनि । दास दासीहरू छन् जसवाट तिमी सेवाको काम लिन्छौ, यिनी यद्यपि तिम्रा अधीन छन् । तथा उनको खानाको प्रवन्ध पनि तिमी गर्दछौ, तर वास्तवमा उनको अधीन छन् तथा उनको खानाको प्रवन्ध पनि तिमी गर्दछौ, तर वास्तवमा उनको जीविका पैदा गर्ने अल्लाह तआला हो, तिमी होइनौं । तिमी यो नठान्नु कि उनलाई जीविका दिने हौ कि यदि तिमीले तिनीहरूलाई भोजन दिएनौं भने भोकै मर्नेछन् ।

خَزَآئِنُهٗ وَمَا نُنَزِّلُهٗٓ اِلَّا بِقَدَرٍ مَّعْلُوْمٍ ﴿٢١﴾

हाम्रो पासमा छ,[1] तथा हामीले प्रत्येक कुरोलाई त्यसको निर्धारित मात्रामा उतारछौं।

وَاَرْسَلْنَا الرِّيٰحَ لَوَاقِحَ فَاَنْزَلْنَا مِنَ السَّمَآءِ مَآءً فَاَسْقَيْنٰكُمُوْهُ ۚ وَمَآ اَنْتُمْ لَهٗ بِخٰزِنِيْنَ ﴿٢٢﴾

(२२) तथा हामी गह्रुङ्गो बोझिल वायुहरूलाई पठाउँछौं, अनि आकाशबाट वर्षा गरी तिमीलाई पानी खुवाउँछौ र तिमी त्यसको भण्डारण कर्ता होइनौ ।[3]

وَاِنَّا لَنَحْنُ نُحْيٖ وَ نُمِيْتُ وَنَحْنُ الْوٰرِثُوْنَ ﴿٢٣﴾

(२३) तथा हामीले नै पालन गर्दछौं तथा मार्दछौं तथा (अन्ततः) हामी नै उत्तराधिकारी हौं ।

وَلَقَدْ عَلِمْنَا الْمُسْتَقْدِمِيْنَ مِنْكُمْ وَلَقَدْ عَلِمْنَا الْمُسْتَاْخِرِيْنَ ﴿٢٤﴾

(२४) तथा तिमीमध्ये अगाडी बढ्ने तथा पछाडी हट्ने पनि हाम्रो ज्ञानमा छ ।

وَاِنَّ رَبَّكَ هُوَ يَحْشُرُهُمْ ؕ اِنَّهٗ حَكِيْمٌ عَلِيْمٌ ﴿٢٥﴾

(२५) तथा तपाईंको प्रभुले सबै मानिसहरूलाई एकत्रित गर्नेछ, निःसन्देह त्यो ठूलो बुद्धिमता भएको, ठूलो विज्ञानी छ ।

وَلَقَدْ خَلَقْنَا الْاِنْسَانَ مِنْ صَلْصَالٍ مِّنْ حَمَاٍ مَّسْنُوْنٍ ﴿٢٦﴾

(२६) तथा वस्तुतः हामीले छङ्ङ-छङ्ङ हुने (सुकेको) माटोबाट, जुनकि सडेको गारोको थियो,

[1]केही विद्वानहरूले (خزائن) सित तात्पर्य वर्षा लिएका छन् किनभने वर्षा नै पैदावारको साधन हो, तर अधिक उचित कुरो यो हो कि यसबाट तात्पर्य सबै संभावित कोष हुन्, जसलाई अल्लाह तआला आफ्नो इच्छा अनुसार तथा योजनाको आधारमा नास्तित्वबाट स्तित्वमा ल्याइराख्छ ।

[2]वायुलाई गह्रुङ्गो यसकारण भनिएको छ कि तीनले बादलहरूलाई उठाँछन् जसमा पानी हुन्छ। जसरी (لقحة) गर्भवती ऊटनीलाई भनिन्छ, जसले गर्भमा बच्चा बोकेको हुन्छ।

[3]अर्थात् यो पानी जुन हामी उतार्दछौं, त्यसलाई तिमी एकत्रित गरेर राख्नुको सामर्थ्य राख्दैनौं, यो हाम्रो शक्ति तथा कृपा हो कि हामीले त्यस पानीलाई स्रोत, इनार तथा नदीहरूद्वारा सुरक्षित राख्दछौं । अन्यथा हामीले चाहेको अवस्थामा पानीको सतह यति तल गरिदिन्छौं कि स्रोत तथा इनारहरूबाट पानी लिन तिम्रो लागि असम्भव हुनसक्छ। जसरी कैयन् पटक अल्लाह तआला केही स्थानहरूमा आफ्नो शक्तिको नमूना प्रदर्शित गर्दछ ।

सृष्टि गरेका हौं ।[1]

وَالْجَآنَّ خَلَقْنٰهُ مِنْ قَبْلُ مِنْ نَّارِ السَّمُوْمِ ﴿٢٧﴾

(२७) तथा त्यसभन्दा पूर्व जिन्नातलाई हामीले ज्वाला भएको अग्निबाट[2] पैदा गऱ्यौं ।

وَاِذْ قَالَ رَبُّكَ لِلْمَلٰٓئِكَةِ اِنِّيْ خَالِقٌۢ بَشَرًا مِّنْ صَلْصَالٍ مِّنْ حَمَاٍ مَّسْنُوْنٍ ﴿٢٨﴾

(२८) तथा जब तिम्रो प्रभुले फरिश्ताहरूसित भन्यो कि म एक मनुष्यलाई कालो सडेको छङ्ग-छङ्ग गर्ने माटोबाट पैदा गर्ने भएको छु ।

فَاِذَا سَوَّيْتُهٗ وَنَفَخْتُ فِيْهِ مِنْ رُّوْحِيْ فَقَعُوْا لَهٗ سٰجِدِيْنَ ﴿٢٩﴾

(२९) त जब मैले त्यसलाई पूरा बनाइसक्छु तथा त्यसमा आफ्नो आत्मा फुकिसकेको हुन्छ तब तिमी सबै उसको लागि शिर निहुराइदिनु ।[3]

فَسَجَدَ الْمَلٰٓئِكَةُ كُلُّهُمْ اَجْمَعُوْنَ ﴿٣٠﴾

(३०) अत: सबै फरिश्ताहरूले सम्पूर्ण रूपमा टाउका टेकिदिए ।

[1]माटोका विभिन्न अवस्थाहरूमा विभिन्न नाम छन् सुकेको माटो (تراب) गीलो माटो (طين) मुछिएको حماء مسنون दुर्गन्धित ﴿حَمَاٍ مَّسْنُوْنٍ﴾ यो सुकेर छङ्ग-छङ्ग गर्न थाल्दछ त (صلصال) तथा जब त्यसलाई अग्निमा पोलिन्छ त, (فخار) (ठिकरी) भनिन्छ यहाँ अल्लाह तआलाले मनुष्यको उत्पत्तिको वर्णन जुन प्रकारले गरेको छ त्यसबाट थाहा हुन्छ कि आदम माटोको पुतला حماء مسنون (मुछिएको) सडिसकेको दूर्गन्धपूर्ण माटोले बनाइयो, जब त्यो (माटो) सुकेर छङ्ग-छङ्ग गर्न थाल्यो (अर्थात्) (صلصال) भयो त त्यसमा आत्मा फूँकियो, यस (صلصال) लाई कुर्आनमा अन्य स्थानमा كالفخار (فخار का समान) भनिएको छ ।

﴿ خَلَقَ الْإِنْسَانَ مِنْ صَلْصَلٍ كَالْفَخَّارِ﴾ (الرحمن : ١٤)

"पैदा गऱ्यो मनुष्यलाई छङ्ग-छङ्ग गर्ने माटोबाट जस्तो ठिकरी ।" (सूर: अर्रहमान-१४)

[2] جَنٌّ लाई جِنٌ किन भन्छन् भने उनीहरू आँखाले देखिदैनन् । सूर: रहमान मा जिन्नहरूको उत्पत्ति مارجٍ مِّن نارٍ बाट भनिएको छ तथा सही मुस्लिमको एक हदीसमा यही भनिएको छ । خلقت الملائكة من نور و خلق الجانُّ من نار وخلق آدم مما وصف لكم किताबुज़् ज़ोहद बाब फी अहादीसि मुतफर्रक) यस आधारमा ज्योति भएको आगो अथवा आगोको मुस्लोको एउटै अर्थ हुन्छ ।

[3]दण्डवत (सजदा) को यो आदेश सम्मान स्वरुप थियो, इबादतको रुपमा थिएन तथा किनभने यो अल्लाहको आदेश थियो त्यसकारण यसलाई मान्य हुनमा कुनै सन्देह छैन । परन्तु अब इस्लाम धर्मको नियमका कसैलाई सम्मान स्वरुप पनि दण्डवत गर्नु उचित छैन ।

إِلَّآ إِبْلِيسَ أَبَىٰٓ أَن يَكُونَ مَعَ ٱلسَّٰجِدِينَ ﴿٣١﴾

(३१) परन्तु इबलीस, जसले सजद: (ढोक) गर्नेहरूमा सम्मिलित हुनबाट अस्वीकार गरिदियो ।

قَالَ يَٰٓإِبْلِيسُ مَا لَكَ أَلَّا تَكُونَ مَعَ ٱلسَّٰجِدِينَ ﴿٣٢﴾

(३२) (अल्लाह तआलाले) भन्यो, हे इबलीस ! तँलाई के भयो कि ढोग गर्नेहरूमा सम्मिलित भइनस् ?

قَالَ لَمْ أَكُن لِّأَسْجُدَ لِبَشَرٍ خَلَقْتَهُۥ مِن صَلْصَٰلٍ مِّنْ حَمَإٍ مَّسْنُونٍ ﴿٣٣﴾

(३३) त्यसले भन्यो कि म त्यस्तो होइन कि यस्तो मानिसलाई ढोग गरू, जसलाई तिमीले कुहिएको गारोको छङ्ग-छङ्ग गर्ने माटोबाट पैदा गऱ्यो ।[1]

قَالَ فَٱخْرُجْ مِنْهَا فَإِنَّكَ رَجِيمٌ ﴿٣٤﴾

(३४) भन्यो कि अब तँ स्वर्गबाट निस्केर गईहाल किनभने तँ धिक्कृत भएछस् ।

وَإِنَّ عَلَيْكَ ٱللَّعْنَةَ إِلَىٰ يَوْمِ ٱلدِّينِ ﴿٣٥﴾

(३५) तथा तँमाथि केयामतको दिनसम्म मेरो धिक्कार छ ।

قَالَ رَبِّ فَأَنظِرْنِىٓ إِلَىٰ يَوْمِ يُبْعَثُونَ ﴿٣٦﴾

(३६) (इब्लीस) भन्नथाल्यो, हे मेरो प्रभु ! मलाई त्यसदिनसम्म अवसर प्रदान गर जबकि मृतकहरू पुन: उठ्याइनेछन् ।

قَالَ فَإِنَّكَ مِنَ ٱلْمُنظَرِينَ ﴿٣٧﴾

(३७) भन्यो कि (ठीक छ) तँ तिनीहरू मध्ये भईस्, जसलाई अवसर दिइएको छ,

إِلَىٰ يَوْمِ ٱلْوَقْتِ ٱلْمَعْلُومِ ﴿٣٨﴾

(३८) निर्धारित दिनको समय सम्म ।

قَالَ رَبِّ بِمَآ أَغْوَيْتَنِى لَأُزَيِّنَنَّ

(३९) (शैतानले) भन्यो कि हे मेरो प्रभु ! तिमीले मलाई विचलित गरेका छौ, मलाई पनि सौगन्ध छ कि म पनि

[1]शैतानले अस्वीकार गर्नुका कारण आदरणीय आदमलाई माटो तथा मनुष्य हुनु बतायो जसको अर्थ यो भयो कि मनुष्यलाई मनुष्य हुनुका कारण हीन ठान्नु शैतानको विचार (दर्शन) हो, जुन सत्यवादीहरूको विश्वास हुन सक्दैन । यसकारण सत्यवादीहरूले नबीहरूलाई मनुष्य हुने कुरा अस्वीकार गर्दैनन्, यसकारण कि उनलाई मनुष्य हुने कुरो कुरआन करीमले स्वयं अत्यन्त स्पष्ट शब्दहरूमा वर्णित गरेको छ, यसका अतिरिक्त उनीहरू मनुष्य भएकाले उनका मान तथा सम्मानमा कुनै अन्तर पर्दैन ।

لَهُمْ فِى الْاَرْضِ وَلَاُغْوِيَنَّهُمْ اَجْمَعِيْنَ ۝٣٩

धर्तीमा उनका लागि मोह उत्पन्न गर्नेछु तथा ती सबैलाई विचलित गर्नेछु ।

اِلَّا عِبَادَكَ مِنْهُمُ الْمُخْلَصِيْنَ ۝٤٠

(४०) (तर) तिम्रा ती भक्तहरूबाहेक जो चयन गरिएका छन् ।

قَالَ هٰذَا صِرَاطٌ عَلَيَّ مُسْتَقِيْمٌ ۝٤١

(४१) अल्लाहले भन्यो कि हो यही मसम्म पुग्ने सोझो मार्ग हो ।[1]

اِنَّ عِبَادِىْ لَيْسَ لَكَ عَلَيْهِمْ سُلْطٰنٌ اِلَّا مَنِ اتَّبَعَكَ مِنَ الْغٰوِيْنَ ۝٤٢

(४२) मेरा भक्तहरूमाथि तिम्रो कुनै प्रभाव हुने छैन,[2] परन्तु हो, ती विचलित मानिसहरूमाथि जसले तेरो अनुकरण गरून् ।

وَاِنَّ جَهَنَّمَ لَمَوْعِدُهُمْ اَجْمَعِيْنَ ۝٤٣

(४३) तथा निःसन्देह ती सबैको वचनको स्थान नरक हो,[3]

لَهَا سَبْعَةُ اَبْوَابٍ ؕ لِكُلِّ بَابٍ مِّنْهُمْ جُزْءٌ مَّقْسُوْمٌ ۝٤٤

(४४) जसका सात द्वार छन् । प्रत्येक द्वारको लागि उनको एउटा भाग विभाजित छ ।[4]

---

[1]अर्थात् तिमी सबैलाई अन्त्यमा मेरै पासमा फर्कि आउनु पर्नेछ । जसले मेरो तथा मेरा रसूलहरूको अनुसरण गरेको हुनेछ, त्यसलाई राम्रो प्रतिफल दिनेछु तथा जो शैतानको अनुकरण गरिराखेको हुनेछ, त्यसलाई कडा सजाय दिनेछु, जुन नरकको रूपमा तयार छ ।

[2]अर्थात् मेरा सदाचारी भक्तहरूमाथि तिम्रो कुनै दाउँ चल्ने छैन । यसको अर्थ यो होइन कि उनीहरूबाट कुनै पाप हुनेछैन, बरु यसको अर्थ यो हो कि उनीहरूबाट यस्तो पाप हुनेछैन, जस पश्चात उनीहरू लज्जित नहोऊन् तथा क्षमा नमाँगून् किनभने त्यही पाप मनुष्यहरूको विनाशको कारण छ कि जस पश्चात मनुष्यमा लज्जा तथा अल्लाहसित क्षमा माँग्नुको भावना जागृत हुँदैन । यस्ता पापका पश्चात नै मानिस पापमाथि पाप गर्दैजान्छ, तथा अन्त्यमा स्थाई विनाश तथा बर्बादी त्यसको दुर्भाग्य बन्छ । तथा ईमानवालाहरूको गुण यो हो कि पापको पुनरावृत्ति गर्दैनन्, बरु तुरुन्त क्षमा माँगेर भविष्यमा त्यसबाट पन्छिने प्रयत्न गर्दछन् ।

[3]अर्थात् जति पनि तेरा अनुयायीहरू हुनेछन्, सबै नरकका ईंधन बन्नेछन् ।

[4]अर्थात् प्रत्येक द्वारको लागि, निर्धारित हुनेछन् जस्तै एउटा द्वारा मुर्तिपूजकहरूका लागि एउटा नास्तिकहरूका लागि, एउटा काफिरहरूका लागि, एउटा व्यभिचारी, ब्याज खानेवालाहरू, चोर तथा डाँकाहरूका लागि आदि । अथवा सात द्वारहरूसित तात्पर्य सात तह तथा कक्ष छन् । पहिलो तह, अथवा कक्ष नरक हो,

إِنَّ الْمُتَّقِينَ فِي جَنَّٰتٍ وَعُيُونٍ ﴿٤٥﴾

(४५) निःसन्देह परहेजग़ारहरू बगैंचा तथा स्रोतहरूमा हुनेछन् ।[1]

ادْخُلُوهَا بِسَلَٰمٍ ءَامِنِينَ ﴿٤٦﴾

(४६) (उनीहरूसित भनिनेछ) सुरक्षा एवं शान्तिका साथ त्यसमा प्रवेश गरिहाल ।[2]

وَنَزَعْنَا مَا فِي صُدُورِهِم مِّنْ غِلٍّ إِخْوَٰنًا عَلَىٰ سُرُرٍ مُّتَقَٰبِلِينَ ﴿٤٧﴾

(४७) तथा उनीहरूका हृदयमा जे-जति पनि आक्रोश तथा कटुता थिए, हामीले सबै निकालिदिनेछौं ।[3] उनीहरू भाई-भाई बनी एक-अर्काका सम्मुख सिंहासनमा बसेका हुनेछन् ।

لَا يَمَسُّهُمْ فِيهَا نَصَبٌ وَمَا هُم مِّنْهَا بِمُخْرَجِينَ ﴿٤٨﴾

(४८) न त त्यहाँ उनीहरूलाई कुनै दुखले स्पर्श गर्नसक्छ तथा न उनीहरू त्यहाँबाट कहिल्यै निकालिनेछन् ।

दोस्रो अग्नि, अनि तीब्र अग्नि, अनि दन्किरहेको आगो, अनि नरकको आगोको तल्लो भाग, अनि तन्दुरको जस्तो पोलिने आगो, अनि पातालको आगो । सबभन्दा माथिको भागमा ती एकेश्वरवादीहरू हुनेछन्, जसबाट स-साना पाप भएका हुनेछन् तथा जसलाई केही समय दण्ड दिए उपरान्त निकालिदिइन्छ अथवा सिफारिसमा निकालिदिइनेछ । दोस्रोमा यहूदी, तेस्रोमा इसाई, चौथोमा नास्तिक, पाँचौमा अन्धविश्वासी (अग्निपूजक), छैठौंमा मूर्तिपूजक तथा सातौंमा पाखण्डी हुनेछन् । सबभन्दा माथिको कक्षको नाम नरक हो, त्यसका पश्चात यसैक्रमसित नाम छन् । (फ़तहुल क़दीर)

[1]नरक तथा नरकवासीहरू पश्चात स्वर्ग तथा स्वर्गमा जानेहरूको वर्णन छ ताकि स्वर्गमा जानुको रूचि होस् । अल्लाहसित तर्सनेवालाहरूसित तात्पर्य मूर्तिपूजाबाट बच्ने एकेश्वरवादी हुन् तथा केही विद्वानहरूका निकट ती ईमानवालाहरू हुन्, जो सधैं नराम्रो कुराबाट पन्छिन्छन् । (عيون) सित तात्पर्य बगैंचा तथा (جنات) सित तात्पर्य नदीहरू हुन् । यी बगैंचा तथा नदीहरू सबै अल्लाहसित तर्सनेहरूका लागि संयुक्तरूपले हुनेछन् अथवा प्रत्येकका लागि बेग्ला-बेग्लै बग़ैचा तथा नदीहरू हुनेछन् अथवा नदीहरू हुनेछन् ।

[2]सुरक्षा प्रत्येक प्रकारको विपत्तिबाट तथा शान्ति प्रत्येक प्रकारको भयबाट । अथवा यो अर्थ हो कि एउटा मुसलमान अर्को मुसलमानलाई अथवा फरिश्ताहरू स्वर्गवालाहरूको लागि सुरक्षित रहनुको प्रार्थना गर्नेछन् अथवा अल्लाहको तर्फबाट उनका लागि शान्ति तथा सुरक्षाको घोषणा हुनेछ ।

[3]संसारमा उनका बीच जुन पनि ईर्ष्या, द्वेष, तथा कटुताका भाव भएका छन्, ती उनका हृदयबाट निकालिदिइने छन् । एक-अर्काको विषयमा उनका हृदय दर्पणको जस्तो सफा हुनेछन् ।

(४९) मेरा भक्तहरूलाई सूचित गरिदेउ कि म धेरै क्षमाशील तथा अत्यन्त कृपालु छु ।

نَبِّئْ عِبَادِيٓ أَنِّيٓ أَنَا ٱلْغَفُورُ ٱلرَّحِيمُ ﴿٤٩﴾

(५०) तथा साथै मेरा यातनाहरू पनि अत्यन्त दुखदायी छन् ।

وَأَنَّ عَذَابِي هُوَ ٱلْعَذَابُ ٱلْأَلِيمُ ﴿٥٠﴾

(५१) तथा उनीहरूलाई इब्राहीमका अतिथिहरूको (पनि) हाल सुनाइदेउ ।

وَنَبِّئْهُمْ عَن ضَيْفِ إِبْرَٰهِيمَ ﴿٥١﴾

(५२) कि जब उनीहरूले उसको पासमा आएर सलाम गरे, त उसले भन्यो कि हामीलाई त तिमीसित डर लाग्दछ ।[1]

إِذْ دَخَلُوا۟ عَلَيْهِ فَقَالُوا۟ سَلَٰمًا قَالَ إِنَّا مِنكُمْ وَجِلُونَ ﴿٥٢﴾

(५३) उनीहरूले भने भय न गर, हामी तिमीलाई एउटा ज्ञान प्रदान गरिएको पुत्रको शुभ-सूचना दिन्छौं ।

قَالُوا۟ لَا تَوْجَلْ إِنَّا نُبَشِّرُكَ بِغُلَٰمٍ عَلِيمٍ ﴿٥٣﴾

(५४) (उनले) भने कि के यस बुढेसले छोए पश्चात तिमीले मलाई शुभ-सूचना दिन्छौं ? यो शुभ-सूचना तिमीले कसरी दिइराखेका छौ ?

قَالَ أَبَشَّرْتُمُونِي عَلَىٰٓ أَن مَّسَّنِيَ ٱلْكِبَرُ فَبِمَ تُبَشِّرُونَ ﴿٥٤﴾

(५५) उनीहरूले भने, हामीले तपाईंलाई पूर्णतः सत्य, शुभ-सूचना सुनाउँछौं । तपाईं निराश मानिसहरूमा सम्मिलित नहुनुहोस् ।

قَالُوا۟ بَشَّرْنَٰكَ بِٱلْحَقِّ فَلَا تَكُن مِّنَ ٱلْقَٰنِطِينَ ﴿٥٥﴾



[1]आदरणीय इब्राहीम अलैहिस्सलामलाई यी स्वर्गदूतहरूबाट भय यसकारण भयो कि उनीहरूले आदरणीय इब्राहीमद्वारा तयार गारिएको पोलिएको बाछोको मासु खाएनन्, जस्तो कि सूरः हूदमा वर्णन भइसकेको छ । यसबाट ज्ञात भयो कि अल्लाह तआलाका महान सम्मानित पैग़म्बरलाई पनि (गुप्त कुराहरू) परोक्षको ज्ञान हुँदैन, यदि उनलाई परोक्षको ज्ञान भएको भए आदरणीय इब्राहीम बुझिहाल्थे कि आउने पाहुना फरिश्ताहरू हुन् तथा उनीहरूका लागि भोजन तयार गर्नुको आवश्यकता छैन, किनभने फरिश्ताहरूलाई मनुष्यहरूको जस्तै खानु-पिउनु आवश्यकता छैन ।

قَالَ وَمَن يَقْنَطُ مِن رَّحْمَةِ رَبِّهِ إِلَّا الضَّالُّونَ ﴿٥٦﴾

(५६) (उनले) भने कि आफ्नो प्रभुको कृपाबाट निराश मात्र विचलित मानिसहरू हुन्छन् ।[1]

قَالَ فَمَا خَطْبُكُمْ أَيُّهَا الْمُرْسَلُونَ ﴿٥٧﴾

(५७) (उनले) सोधें हे अल्लाहद्वारा पठाइएका (फरिश्ताहरू) ! तिम्रो यस्तो के विशेष कार्य छ ?[2]

قَالُوا إِنَّا أُرْسِلْنَا إِلَىٰ قَوْمٍ مُّجْرِمِينَ ﴿٥٨﴾

(५८) उनीहरूले उत्तर दिए कि हामी पापी मानिसहरूतिर पठाइएका हौं ।

إِلَّا آلَ لُوطٍ إِنَّا لَمُنَجُّوهُمْ أَجْمَعِينَ ﴿٥٩﴾

(५९) परन्तु लूतका परिवार कि हामीले ती सबैलाई बचाइहाल्ने छौं ।

إِلَّا امْرَأَتَهُ قَدَّرْنَا ۙ إِنَّهَا لَمِنَ الْغَابِرِينَ ﴿٦٠﴾

(६०) त्यसकी पत्नीबाहेक जसबारे हामीले निश्चित गरिदिएका छौं, कि त्यो पछि रहनेहरूमध्ये हुनेछ ।

فَلَمَّا جَاءَ آلَ لُوطٍ الْمُرْسَلُونَ ﴿٦١﴾

(६१) जब पठाइएका स्वर्गदूतहरू लूत परिवारको पासमा पुगे ।

قَالَ إِنَّكُمْ قَوْمٌ مُّنكَرُونَ ﴿٦٢﴾

(६२) त लूतले भने तिमीहरू त केही अपरिचित जस्तो प्रतीत हुन्छौ ।[3]

[1]अर्थात् सन्तान पैदा हुने समाचारमाथि म आश्चर्य तथा असम्भव हुने कुरोको प्रदर्शन तं केवल आफ्नो वृद्धा अवस्थाको कारण गरिराखेको छु । यो कुरा होइन कि म आफ्नो प्रभुको कृपाबाट निराश त केवल मार्ग-बिचलितहरू हुन्छन् ।

[2]आदरणीय इब्राहीमले यी फरिश्ताहरूको कुराकानीबाट यो अनुमान लगाए कि यिनीहरू मात्र सन्तानको शुभ-सूचना दिन आएका होइनन्, बरु उनीहरूको आगमनको मूल कारण केही भिन्दै छ । अत: उनले सोधे ।

[3]यी फरिश्ताहरू सुन्दर तथा नवयुवकहरूका रूपमा आएका थिए तथा आदरणीय लूतका लागि एकदमै अपरिचित थिए, यसकारण उनले उनीसित अनभिज्ञता तथा अपरिचतको प्रदर्शन गरे ।

(६३) उनले भने (होइन) बरु हामीले तिम्रो पासमा त्यो कुरा ल्याएका छौं, जसमा यिनीहरूले सन्देह गरिराखेका थिए ।[1]

قَالُوْا بَلْ جِئْنٰكَ بِمَا كَانُوْا فِيْهِ يَمْتَرُوْنَ ﴿٦٣﴾

(६४) तथा हामी त तिम्रो पासमा (स्पष्ट) सत्य लिएर आएका छौं तथा हामी छौं पनि पूर्ण सत्यवादी ।[2]

وَاَتَيْنٰكَ بِالْحَقِّ وَاِنَّا لَصٰدِقُوْنَ ﴿٦٤﴾

(६५) अत: अब तिमी आफ्नो परिवार सहित यस रातिको कुनै भागमा निस्किहाल, र स्वयं उनको पछाडि रहनु,[3] (तथा सावधान) ! तिनीमध्ये कोही पनि फर्केर नहेरोस् तथा जहाका लागि आदेश तिमीलाई गरिदैछ, त्यहा गइहाल्नू ।

فَاَسْرِ بِاَهْلِكَ بِقِطْعٍ مِّنَ الَّيْلِ وَاتَّبِعْ اَدْبَارَهُمْ وَلَا يَلْتَفِتْ مِنْكُمْ اَحَدٌ وَّامْضُوْا حَيْثُ تُؤْمَرُوْنَ ﴿٦٥﴾

(६६) तथा हामीले उसतिर यस कुराको निर्णय गरिदिऔं कि बिहान ती सबैको जरा काटिदिइने छ ।[4]

وَقَضَيْنَآ اِلَيْهِ ذٰلِكَ الْاَمْرَ اَنَّ دَابِرَ هٰٓؤُلَآءِ مَقْطُوْعٌ مُّصْبِحِيْنَ ﴿٦٦﴾

(६७) तथा नगरका मानिसहरू खशियाली मनाउदै आए ।[5]

وَجَآءَ اَهْلُ الْمَدِيْنَةِ يَسْتَبْشِرُوْنَ ﴿٦٧﴾

---

[1]अर्थात् अल्लाहको प्रकोप जसमा तिम्रो समुदायलाई सन्देह छ कि त्यो आउन पनि सक्दछ ।

[2]यस स्पष्ट सत्यबाट पनि तात्पर्य प्रकोप छ, जसका लागि उनी पठाइएका थिए, यसकारण उनीहरूले यो भने कि हामी हौं पनि अत्यन्त सत्यवादी । अर्थात् प्रकोपको जुन कुरा हामी भनिराखेका छौं, यसमा साँचो छौं। अब समुदायको विनाशको समय अत्यन्त निकट आइपुगेको छ।

[3]ताकि कोही ईमानवाला पछि नरहोस्, तिमीले उनलाई अगाडि पारिराख ।

[4]अर्थात् लूतलाई प्रकाशना (वह्यी) द्वारा यस निर्णयबाट सूचित गरियो कि प्रात: हुनुभन्दा अघि यिनीहरूका जरा काटिदिइने छन् अथवा (دابر) सित तात्पर्य त्यो अन्तिम मनुष्य हो, जो शेष रहने छ, अनि भन्यो त्यो पनि प्रात: हुन्जेलसम्म नष्ट गरिदिइनेछ ।

[5]यता भने आदरणीय लूतको घरमा समुदायको विनाशको निर्णय भइराखेको थियो। उता लूतका समुदायका मानिसहरूलाई थाहा भयो कि लूतको घरमा सुन्दर नवयुवक अतिथिहरू आएका छन्, त आफ्नो समलैंगिक दुराचारका कारण निकै प्रसन्न भए तथा प्रसन्न अवस्थामा आदरणीय लूतका घर आए तथा उनीसित माग गरे कि ती नवयुवकहरूलाई तिनीहरूलाई सुम्पियोस् ताकि उनीहरू तिनीहरूले दुराचार गरी आफ्ना कामवासनालाई शान्त गर्न सकून् ।

قَالَ إِنَّ هَٰٓؤُلَآءِ ضَيْفِى فَلَا تَفْضَحُونِ ﴿٦٨﴾

(६८) (लूतले) भने यिनीहरू मेरा अतिथि हुन्, तिमीहरू मलाई अपमानित न गर ।[1]

وَاتَّقُوا اللَّهَ وَلَا تُخْزُونِ ﴿٦٩﴾

(६९) तथा अल्लाह (तआला) सित तर्स एवं मलाई अपमानित लज्जित न गर ।

قَالُوٓا أَوَلَمْ نَنْهَكَ عَنِ الْعَٰلَمِينَ ﴿٧٠﴾

(७०) उनीहरूले भने के हामीले तिमीलाई संसारभरि (को जिम्मेवारी) लिनबाट रोकेका थिएनौं ?[2]

قَالَ هَٰٓؤُلَآءِ بَنَاتِىٓ إِن كُنتُمْ فَٰعِلِينَ ﴿٧١﴾

(७१) (लूतले) भने यदि तिमीलाई गर्नु नै छ, भने यी मेरा पुत्रीहरू उपस्थित छन् ।[3]

لَعَمْرُكَ إِنَّهُمْ لَفِى سَكْرَتِهِمْ يَعْمَهُونَ ﴿٧٢﴾

(७२) तिम्रो आयुको सौगन्ध ! उनी त आफ्नो मस्तीमा हिंडिराखेका थिए ।[4]

---

[1]आदरणीय लूतले उनीहरूलाई बुझाउन प्रयत्न गरे कि उनी अतिथि हुन्, उनीहरूलाई म कसरी तिमीलाई सुम्पन सक्दछु, यसमा त मेरो अपमान छ ।

[2]उनीहरूले दुराग्रह तथा दुर्व्यवहारको प्रदर्शन गर्दै भने कि हे लूत ! तिम्रो यी आगन्तुकहरूसित के नाता छ तथा उनका पक्ष किन लिन्छौ ? के हामीले तिमीलाई रोकेनौं कि आगन्तुक अपरिचितहरूको पक्ष नलिने गर, अथवा उनलाई आफ्नो अतिथि न बनाउने गर ? यो सम्पूर्ण कुराकानी त्यस समय भयो जबकि आदरणीय लूतलाई यो ज्ञात थिएन कि यी अपरिचित अतिथि अल्लाहद्वारा पठाइएका फरिश्ताहरू हुन् तथा उनीहरू यसै दुष्चरित्र समुदायलाई ध्वस्त गर्नका लागि आएका हुन्, जो यी फरिश्ताहरूसँग दूराचार गर्न दृढ थिए, जस्तो कि सूर: हूदमा वर्णन आइसकेको छ । यहाँ उनी फरिश्ताहरू हुने कुराको वर्णन अघि नै आइसकेको छ ।

[3]अर्थात् तिमीहरूले उनीहरूसित विवाह गरिहाल, अथवा आफ्नो समुदायका स्त्रीहरूलाई छोरीहरू भने, अर्थात् तिमी स्त्रीहरूसित विवाह गर अथवा जो विवाहित छन्, उनीहरूले कामवासनाको तृप्ति आफ्ना पत्नीहरूबाट गर्नुपर्छ ।

[4]अल्लाह तआला नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सम्बोधित गरी, उनको जीवनको सौगन्ध खाइराखेको छ, जसबाट उहाँ सल्लल्लाहु अलैहि वसल्लमको गरिमा तथा सम्मानको स्पष्टीकरण भइराखेको छ, तर अन्य कसैको लागि अल्लाहका अतिरिक्त अन्य कसैको सौगन्ध खानु उचित छैन । अल्लाह तआला त पूर्ण स्वामी हो, त्यो जसको चाहे, सौगन्ध खान्छ, उसित प्रश्न गर्ने को छ ? अल्लाह तआलाको आदेश छ कि जसरी मदिराको नशामा मस्त मनुष्यको बुद्धि विक्रित हुनजान्छ, त्यसैप्रकार यिनीहरू आफ्ना नराम्रो कम तथा विचलनमा यति मस्त

فَأَخَذَتْهُمُ الصَّيْحَةُ مُشْرِقِينَ ﴿٧٣﴾

(७३) अनि सूर्योदयको समयमा उनीहरूलाई एउटा तीव्र आवाजले समातिहाल्यो ।[1]

فَجَعَلْنَا عَالِيَهَا سَافِلَهَا وَأَمْطَرْنَا عَلَيْهِمْ حِجَارَةً مِّن سِجِّيلٍ ﴿٧٤﴾

(७४) अन्ततः हामीले त्यस (नगर) लाई तलमाथि पारिदियौं ।[2] तथा उनीहरूमाथि ढुङ्गाका स-साना टुक्राहरू[3] बर्सायौं ।

إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّلْمُتَوَسِّمِينَ ﴿٧٥﴾

(७५) निःसन्देह हरेक शिक्षा प्राप्त गर्नेहरूका लागि[4] यसमा धेरै निशानीहरू छन् ।

وَإِنَّهَا لَبِسَبِيلٍ مُّقِيمٍ ﴿٧٦﴾

(७६) र यो वस्ती यस्तो मार्गमा छ, जसमा निरन्तर यातायात भइरहन्छ ।[5]

---

थिए कि आदरणीय लूतका यति उचित कुरा पनि उनीहरूका बुद्धिमा आउन सकेन ।

[1]एउटा चित्कारले जबकि सूर्योदय भइसकेको थियो, उनको अन्त गरिदियो । केही विद्वानहरू भन्दछन् कि यो तीव्र आवाज आदरणीय जिब्रीलको थियो ।

[2]भनिन्छ कि उनका वस्तीहरूलाई धर्तीबाट उचालेर आकाशमा लगियो तथा त्यहाँबाट उनलाई उल्टो पारेर धर्तीमा फ्याँकिदिइयो । यसप्रकार माथिको भाग तल तथा तलको भाग माथि गरिदिइयो, तथा भनिन्छ कि यसबाट तात्पर्य मात्र त्यस वस्तीलाई छतहरूसहित धर्तीमा गाडिदिनु हो ।

[3]यस पश्चात कडा खस्रो रूपमा विशेष प्रकारका ढुङ्गा बर्साइए । यसप्रकार उनीहरूलाई तीन प्रकारका प्रकोपहरूबाट पीडित गरी शिक्षाप्रद-चिन्हको रूपमा बनाइयो ।

[4]गूढ दृष्टिले परीक्षण गर्ने तथा सोच-विचार गर्नेहरूलाई (متوسمين) भनिएको छ । मोतवस्सेमीनका लागि त्यस घटनामा शिक्षाका पक्ष तथा लक्षण छन् ।

[5]तात्पर्य मुख्य मार्ग हो । अर्थात् लूतका समुदायका बस्तीहरू मदीनाबाट सीरिया जाँदाखेरि मार्गमा पर्छ । प्रत्येक यात्रीलाई तिनै मार्गबाट भई गुज्रनुपर्ने हुन्छ । भनिन्छ कि यी पाँच वस्तीहरू सदूम, (यो केन्द्रिय बस्ती थियो) साअबः, सावः, असरः तथा दूमा । अनि यो भनिन्छ कि आदरणीय जिब्रीलले उनलाई काँधमा उचाले तथा आकाशमा चढिहाले, यहाँसम्मकि आकाशमा भएकाहरूले उनका कुकुरहरूका भुक्ने तथा कुखुराहरूको कराउने आवाजहरू सुने तथा पछि उनलाई धर्तीमा बजारिदिए । (इब्ने कसीर)

إِنَّ فِي ذَٰلِكَ لَآيَةً لِّلْمُؤْمِنِينَ ﴿٧٧﴾

(७७) तथा यसमा निष्ठावानहरूका लागि ठूलो निशानी छ ।

وَإِن كَانَ أَصْحَابُ الْأَيْكَةِ لَظَالِمِينَ ﴿٧٨﴾

(७८) तथा ऐक: बस्तीमा बस्नेहरू पनि अत्यन्त अत्याचारी थिए ।[1]

فَانتَقَمْنَا مِنْهُمْ وَإِنَّهُمَا لَبِإِمَامٍ مُّبِينٍ ﴿٧٩﴾

(७९) जोसित अन्त्यमा हामीले बदला लिएर नै छाड्यौं । यी दुबै नगर खुल्ला (सामान्य) मार्गमा छन् ।[2]

وَلَقَدْ كَذَّبَ أَصْحَابُ الْحِجْرِ الْمُرْسَلِينَ ﴿٨٠﴾

(८०) तथा हिज्रवालाहरूले पनि र सूलहरूलाई असत्य भने ।[3]

وَآتَيْنَاهُمْ آيَاتِنَا فَكَانُوا عَنْهَا مُعْرِضِينَ ﴿٨١﴾

(८१) तथा उनीहरूलाई हामीले आफ्ना निशानीहरू प्रदान गरेका थियौं तर तैपनि उनीहरूले तिनको उपेक्षा

---

[1](أيكة) घना वृक्षलाई भन्छन् । यस बस्तीमा घना (बाक्ला) वृक्षहरू हुनेछन् ।.यसकारण उनीहरूलाई (أصحاب الأيكة) (वन अथवा जङ्गलवाला) भनिएको छ । त्यसबाट तात्पर्य शोएबको समुदाय हो तथा उनको समय आदरणीय लूतको पश्चातको हो तथा उनको क्षेत्र मदीना तथा सीरियाको मध्य लूत समुदायका वस्तीहरूको निकट थियो । यसलाई मदयन भनिन्छ, जुन आदरणीय इब्राहीमका पुत्र अथवा पौत्रको नाम थियो तथा उनैका नाममा बस्तीको नाम परेको थियो । उनको अत्याचार यो थियो कि अल्लाहका साथ साझेदार बनाउँथे, लुट्नु उनको कर्म थियो तथा कम तौल्नु तथा नाप्नु उनको व्यवहार थियो । उनीमाथि जब प्रकोप आयो त एउटा वादल छायो अनि चर्को आवाज र भूकम्पले उनीहरूलाई ध्वस्त पारिदियो ।

[2](إمام مبين) को अर्थ पनि मुख्य मार्ग हो, जहाँबाट रात-दिन गुज्रन्छन् । दुबै नगरहरूसित तात्पर्य लूतको समुदायको बस्ती तथा शोएबका समुदायको निवासस्थान मदयन तात्पर्य छ । यी दुबै एक-अर्काका निकट नै भए ।

[3](حجر) आदरणीय स्वालेहका समुदाय समूदका वस्तीहरूको नाम थियो । उनीहरूलाई (أصحاب الحجر) भनिएको छ । यो वस्ती मदीना तथा तबूकका मध्यमा थियो । उनीहरूले आफ्ना पैग़म्बर आदरणीय स्वालेहलाई झूठा भने, तर यहाँ अल्लाह तआलाले भन्यो,"उनीहरूले पैग़म्बरहरूलाई झूटा भने यो यसकारण छ कि एउटा पैग़म्बरलाई झुठलाउनु त्यस्तै छ जस्तो सारा पैग़म्बरहरूलाई झुठलाए ।

गरिरहे ।[1]

وَكَانُوا يَنْحِتُونَ مِنَ الْجِبَالِ بُيُوتًا آمِنِينَ ﴿٨٢﴾

(८२) तथा यिनीहरूले निर्भीक रुपमा[2] पहाडहरूलाई फुटालेर घर बनाउने गर्दथे ।

فَأَخَذَتْهُمُ الصَّيْحَةُ مُصْبِحِينَ ﴿٨٣﴾

(८३) अन्तमा उनीहरूलाई पनि प्रातः कालमा चर्को चित्कार (ध्वनि) ले आइ समात्यो ।[3]

فَمَا أَغْنَىٰ عَنْهُم مَّا كَانُوا يَكْسِبُونَ ﴿٨٤﴾

(८४) अतः उनका कुनै उपाय तथा कर्मले उनीहरूलाई कुनै लाभ पुऱ्याएन ।

وَمَا خَلَقْنَا السَّمَاوَاتِ وَالْأَرْضَ وَمَا بَيْنَهُمَا إِلَّا بِالْحَقِّ ۗ وَإِنَّ السَّاعَةَ لَآتِيَةٌ ۖ فَاصْفَحِ الصَّفْحَ الْجَمِيلَ ﴿٨٥﴾

(८५) तथा हामीले आकाशहरू तथा धर्तीलाई एवं उनका मध्य भएका सबै कुरालाई सत्यका साथ नै रचेका छौं ।[4] तथा केयामत अवश्य आउने नै छ, तसर्थ तिमी सभ्यता तथा असलपनाले सहन गरिहाल ।

[1]यी निशानीहरूमा त्यो ऊँटनी पनि थियो जुन उनीहरूको भनाई पछि एउटा चट्टानबाट चमत्कार स्वरुप निस्केकी थिई, तर अत्याचारीहरूले त्यसलाई पनि मारिहाले ।

[2]अर्थात् विना कुनै भय अथवा संकोच पर्वतहरूलाई शिल्प विद्याद्वारा काट्ने गर्थे । नौं हिजरीमा तबूक जाँदाखेरि जब रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम यस वस्तीबाट गुज्रनु भयो त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले टाउकोमा कपडा बेर्नु भयो, आफ्नो सवारीको गति तीव्र गरिदिनु भयो तथा सहाबासित भन्नुभयो कि रूँदै तथा अल्लाहको प्रकोपसित तर्सदै यस वस्तीबाट हिड । (इब्ने कसीर) सहीह बुखारी तथा सहीह मुस्लिममा संख्या ४३३ तथा २२८५ मा वर्णित छ ।

[3]आदरणीय स्वालेहले उनीसित भने कि तीन दिन पश्चात तिमीमाथि प्रकोप आउनेछ, अतः चौथो दिन उनीमाथि प्रकोप आइहाल्यो ।

[4]सत्यसित तात्पर्य ती लाभ तथा हित हुन्, जुन आकाश तथा धर्तीको रचनाको उद्देश्य हो अथवा सत्यसित तात्पर्य सत्कर्मीलाई सत्कर्मको प्रतिफल तथा कुकर्मीहरूलाई तिनका कुकर्मको दण्ड दिनु हो । जुनप्रकार एक अन्य स्थानमा भन्यो: अल्लाहकै लागि हो जे आकाशहरूमा छ तथा जे धर्तीमा छ ताकि त्यसले नराम्राहरूलाई उनका नराम्रा कर्म तथा सत्कर्मीहरूलाई उनका सत्कर्मको प्रतिफल देओस् । (सूरः अल-नज्म-३१)

إِنَّ رَبَّكَ هُوَ الْخَلَّاقُ الْعَلِيمُ ﴿٨٦﴾

(८६) निःसन्देह तिम्रो प्रभु नै स्रष्टा तथा सर्वज्ञाता हो ।

وَلَقَدْ آتَيْنَاكَ سَبْعًا مِّنَ الْمَثَانِي وَالْقُرْآنَ الْعَظِيمَ ﴿٨٧﴾

(८७) तथा निःसन्देह हामीले तपाईंलाई सात आयतहरू दिएका छौं[1] जुन दोहोर्‍याइन्छन् । तथा महान कुरआन पनि दिएका छौं ।

لَا تَمُدَّنَّ عَيْنَيْكَ إِلَىٰ مَا مَتَّعْنَا بِهِ أَزْوَاجًا مِّنْهُمْ وَلَا تَحْزَنْ عَلَيْهِمْ وَاخْفِضْ جَنَاحَكَ لِلْمُؤْمِنِينَ ﴿٨٨﴾

(८८) तपाईं कदापि आफ्ना आँखा यस कुरातिर नपार्नुस्[2] जसलाई हामीले उनीहरूमध्ये कैयन् प्रकारका मानिसहरूलाई प्रदान गरेका छौं, न उनीमाथि तपाईं शोक गर्नुस् तथा ईमान भएकाहरूका लागि आफ्ना भुजाहरू (नम्रतामा) झुकाएर राख्नुस् ।

وَقُلْ إِنِّي أَنَا النَّذِيرُ الْمُبِينُ ﴿٨٩﴾

(८९) तथा भनिदिनुस् कि म स्पष्टरुपले तर्साउने (सचेतक) हूँ ।

---

[1] (سبع مثانی) सित तात्पर्य के हो ? यसबारे व्याख्याकारहरूमा मतभेद छ । उचित कुरो यो हो कि यसबाट तात्पर्य सूरः फ़ातिहा हो । यी सात आयतहरू हुन् तथा प्रत्येक नमाज़को प्रत्येक रकअ़तमा पढिन्छन् । (मसानीका अर्थ पुनरावृत्ति गरिएका छन्) हदीसबाट पनि यसको पुष्टि हुन्छ । अतः एउटा हदीसमा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो ﴿ٱلْحَمْدُ لِلَّهِ رَبِّ ٱلْعَٰلَمِينَ﴾ यो "सबअ मसानी तथा कुरआन अज़ीम हो जुन मलाई दिइएको हो । (सहीह बुख़ारी तफ़सीर सूरः अल-हिज्र) एउटा अन्य हदीसमा भन्नुभयो أُمُّ الْقُرْآنِ هِيَ السَّبْعُ الْمَثَانِي وَالْقُرْآنُ الْعَظِيمُ उपरोक्त सन्दर्भ) सूरः फ़ातिहा कुरआनको एउटा भाग हो , यस कारण कुरआन अज़ीमको वर्णन पनि साथै गरिएको छ ।

[2] अर्थात् हामीले सूरः फ़ातिहा तथा कुरआन अज़ीम जस्ता प्रदानहरूबाट तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई सम्मानित गरेका छौं, यसकारण संसार तथा त्यसको शोभा एवं ती विभिन्न प्रकारका सांसारिकहरूतिर नहेर्नुस्, जसलाई नश्वर संसारका अस्थाई वस्तुहरूलाई हामीले दिएका छौं तथा तिनीहरू जो तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई झुट्लाउँछन् त्यसमाथि दुखी नहुनुहोस् तथा ईमान भएकाहरूका लागि आफ्ना भुजा झुकाएर राख्नुस् । अर्थात उनका निम्ति नम्रता तथा प्रेम-भाव अपनाउनुहोस् । यस लोकोक्तिको यथार्थता यो हो कि जब पंक्षी आफ्ना बच्चाहरूलाई आफ्नो प्रेम छायाँमा लिन्छ त उनलाई आफ्ना भुजा अर्थात पखेटाहरूमा लिन्छ । यसप्रकार यो शब्दहरूको योग (समस्त) नम्रता प्रेम एवं प्यारको भाव अपनाउनुको भावार्थमा प्रयोग हुन्छ ।

| | |
|---|---|
| (९०) जस्तो कि हामीले भागबण्डा गर्नेहरूमाथि उतार्यौं ।[1] | كَمَآ أَنزَلْنَا عَلَى ٱلْمُقْتَسِمِينَ ﴿٩٠﴾ |
| (९१) जसले यस कुर्आनलाई टुक्रा-टुक्रा गरिदिए । | ٱلَّذِينَ جَعَلُوا۟ ٱلْقُرْءَانَ عِضِينَ ﴿٩١﴾ |
| (९२) सौगन्ध छ तिम्रो प्रभुको ! हामीले ती सबैसित अवश्य नै सोधपुछ गर्नेछौं । | فَوَرَبِّكَ لَنَسْـَٔلَنَّهُمْ أَجْمَعِينَ ﴿٩٢﴾ |
| (९३) प्रत्येक त्यस कुराको विषयमा जुन उनीहरूले गर्दथे । | عَمَّا كَانُوا۟ يَعْمَلُونَ ﴿٩٣﴾ |
| (९४) तसर्थ तपाईंलाई[2] जुन कुरोको आदेश गरिदैछ, त्यसलाई खुल्ला रूपले सुनाइदिनुस् तथा मुश्रिकहरूतिर (मिश्रणवादीहरू) ध्यान नदिनुस् । | فَٱصْدَعْ بِمَا تُؤْمَرُ وَأَعْرِضْ عَنِ ٱلْمُشْرِكِينَ ﴿٩٤﴾ |

[1]केही व्याख्याकारहरूको निकट (أَنْزَلْنَا) का कर्मकारक (العذاب) लुप्त छ । अर्थ यो हो कि म तिमीलाई स्पष्टरूपले प्रकोपबाट चेतावनी दिने हुँ, जस्तै यो प्रकोप जुन (مُقْتَسِمِيْن) माथि अवतरित भयो । (مُقْتَسِمِيْن) को हुन्, जसले अल्लाहको किताबलाई टुक्रा-टुक्रा गरिदिए ? केही विद्वानहरू भन्छन् कि यसबाट कुरैशको समुदाय अभिप्राय छ, जसले अल्लाहको किताब विभाजित गरिदिए, यसका केही भागलाई कविता, केही भागलाई जादू, केहीलाई अन्धविश्वास तथा केहीलाई पूर्वजहरूका कथा भने । केही विद्वान भन्छन् (مُقْتَسِمِيْن) सित अहले किताब तथा कुर्आनसित तात्पर्य तौरात तथा इंजील हुन् । उनीहरूले यी आकाशीय पुस्तकहरूलाई विभिन्न भागहरूमा विभाजित गरिदिएका थिए । केही विद्वानहरू भन्छन् कि यो आदरणीय स्वालेहको समुदाय हो, जसले आपसमा कसम खाएका थिए कि स्वालेह तथा उनका परिवारका सदस्यहरूलाई रातिको अँध्यारोमा हत्या गरिहाल्ने छन् ।

﴿تَقَاسَمُوا بِاللَّهِ لَنُبَيِّتَنَّهُ وَأَهْلَهُ﴾ [النمل: ٤٩]

"उनीहरूले अल्लाहको सौगन्ध खाए कि राति नै हामी स्वालेह तथा परिवारका सदस्यहरूमाथि छापा मार्नेछौं ।" (सूरः अन-नमल-४९)

तथा आकाशीय पुस्तकलाई टुक्रा-टुक्रा गरिहाले । (عِضِيْن) एउटा अर्थ यो पनि गरिएको छ कि त्यसका केही कुराहरूमा ईमान स्थापित तथा केहीबाट इन्कार गर्नु ।

[2] (اصدع) को अर्थ स्पष्ट पारी वर्णन गर्नु, यो आयत अवतरण हुनुभन्दा पूर्व उहाँ सल्लल्लाहु अलैहि वसल्लम लुकिछिपी धर्मको प्रचार गर्दथे, यस पश्चात उहाँ

إِنَّا كَفَيْنَاكَ الْمُسْتَهْزِئِينَ ﴿٩٥﴾

(९५) तपाईंसित जो उपहास गर्दछन् उनका (दण्ड) को लागि हामी पर्याप्त छौं।

الَّذِينَ يَجْعَلُونَ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ ۚ فَسَوْفَ يَعْلَمُونَ ﴿٩٦﴾

(९६) जो अल्लाहको साथमा अन्य देवता (पूज्य) बनाउँछन्, उनीहरूलाई शीघ्र नै ज्ञात भइहाल्नेछ।

وَلَقَدْ نَعْلَمُ أَنَّكَ يَضِيقُ صَدْرُكَ بِمَا يَقُولُونَ ﴿٩٧﴾

(९७) तथा हामीलाई राम्ररी ज्ञात छ कि उनका कुराहरूबाट तपाईंको हृदय संकुचित (दुखी) हुन्छ।

فَسَبِّحْ بِحَمْدِ رَبِّكَ وَكُن مِّنَ السَّاجِدِينَ ﴿٩٨﴾

(९८) तपाईं आफ्नो प्रभुको महिमा तथा प्रशंसाको वर्णन गरिराख्नुस्। तथा शिर (टाउको) निहुराउनेहरूमा सम्मिलित हुनुस्।

وَاعْبُدْ رَبَّكَ حَتَّىٰ يَأْتِيَكَ الْيَقِينُ ﴿٩٩﴾

(९९) तथा आफ्नो प्रभुको उपासना गर्दै रहनुस् यहाँसम्मकि तपाईंलाई निर्धारित समय (मृत्यु) आई पुगोस्।[1]

## سُورَةُ النَّحْلِ

## सूरतुन-नहल-१६

सूरः नहल मक्कामा उत्रेको तथा यसमा एकसय अठ्ठाईस् आयतहरू र सोह्र रूकूअ छन्।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाह तआलाको नामबाट प्रारम्भ गर्दछु, जो अत्यन्त कृपालु एवं अत्यन्त दयालु छ।

أَتَىٰ أَمْرُ اللَّهِ فَلَا تَسْتَعْجِلُوهُ ۚ

(१) अल्लाह (तआला) को आदेश आइपुग्यो, अब

---

सल्लल्लाहु अलैहि वसल्लमले स्पष्टरुपले धर्मको प्रचार-प्रसार (गर्न) प्रारम्भ गरिदिनु भयो। (फतहुल कदीर)

[1]मुश्रिकीन (मिश्रणवादी) जो अल्लाहको पूजा एवं गुणहरूमा अन्यलाई साक्षी बनाउँछन्। तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई जादूगर, दीवाना, भविष्यवेत्ता आदि भन्दथे जसबाट तपाईं सल्लल्लाहु अलैहि वसल्लम मानवीय प्रकृतिको कारण दुखी हुन्थे, अल्लाह तआलाले सान्त्वना दिंदै भन्नुभयो कि तपाईं सल्लल्लाहु अलैहि वसल्लम अल्लाहको प्रशंसा तथा गुणगान गर्नुस्, नमाज़ पढ्नुस् तथा आफ्नो प्रभुको उपासना गर्नुस्। यसबाट तपाईंलाई हार्दिक शान्ति पनि प्राप्त हुनेछ तथा अल्लाहको सहायता पनि प्राप्त हुनेछ। दण्डवत् (सजदासित यहाँ नमाज़ तथा यकीनसित मृत्यु तात्पर्य छ।

سُبۡحٰنَهٗ وَتَعٰلٰى عَمَّا يُشۡرِكُوۡنَ ①

यसको लागि हतार नगर,[1] सम्पूर्ण पवित्रता उसको लागि छ, त्यो महान र उच्च छ त्यस शिर्कभन्दा जुन उनीहरू गरिराखेका छन् ।

يُنَزِّلُ الۡمَلٰٓـئِكَةَ بِالرُّوۡحِ مِنۡ اَمۡرِهٖ عَلٰى مَنۡ يَّشَآءُ مِنۡ عِبَادِهٖۤ اَنۡ اَنۡذِرُوۡۤا اَنَّهٗ لَاۤ اِلٰهَ اِلَّاۤ اَنَا فَاتَّقُوۡنِ ②

(२) त्यसैले फरिश्ताहरूलाई आफ्नो प्रकाशना (वह्यी)[2] दिएर आफ्नो आदेशद्वारा आफ्ना भक्तहरूमध्ये जसमाथि चाहन्छ,[3] अवतरित गर्दछ कि तिमी मानिसहरूलाई सचेत गरिदेउ कि म बाहेक अन्य कोही पूजा योग्य छैन, अतः तिमी मसित तर्स ।

---

[1]यसबाट तात्पर्य केयामत हो, अर्थात् त्यो केयामत निकट आइसकेको छ, जसलाई तिमी टाढा ठान्दथ्यौ, तसर्थ हतार नगर, अथवा त्यो प्रकोप तात्पर्य हो, जसको मूर्तिपूजक माँग गर्दै थिए । त्यसलाई भविष्यकालको सट्टा भूतकालमा वर्णन गरिएको छ, किनभने त्यो आउने कुरो निश्चित छ ।

[2] (روح) सित तात्पर्य प्रकाशना (वह्यी) हो, जस्तो कि कुर्आन मजीदमा अन्य स्थानमा छ ।

﴿وَكَذَٰلِكَ أَوۡحَيۡنَا إِلَيۡكَ رُوحًا مِّنۡ أَمۡرِنَا ۚ مَا كُنتَ تَدۡرِى مَا ٱلۡكِتَٰبُ وَلَا ٱلۡإِيمَٰنُ﴾

"यसैप्रकार हामीले तपाईंतिर आफ्नो आदेशले प्रकाशना (वह्यी) गर्यौं, यसभन्दा पहिला तपाईंलाई ज्ञान थिएन कि किताब के हो तथा ईमान के हो ।" (सूरः अल-शूरा-५२)

[3]तात्पर्य नबी हुन्, जसमाथि प्रकाशना (वह्यी) अवतरित भयो, जस्तो कि अल्लाहले भन्नुभयोः

﴿ٱللَّهُ أَعۡلَمُ حَيۡثُ يَجۡعَلُ رِسَالَتَهُۥ﴾

"अल्लाह राम्ररी जान्दछ कि त्यो आफ्नो रिसालत कहाँ राखोस् ।" (सूरः अल-अनाम-१२४)

﴿يُلۡقِى ٱلرُّوحَ مِنۡ أَمۡرِهِۦ عَلَىٰ مَن يَشَآءُ مِنۡ عِبَادِهِۦ لِيُنذِرَ يَوۡمَ ٱلتَّلَاقِ﴾

"त्यसले आफ्नो आदेशले आफ्ना भक्तहरू मध्ये जसलाई चाहन्छ त्यसमाथि प्रकाशना (वह्यी) अवतरित गर्दछ ताकि उनीहरू मिलन हुने दिन (केयामतको दिन) बाट मानिसहरूलाई तर्साऊन् । (सूरः अल-मोमिन-१५)

(३) उसैले आकाशहरू तथा धर्तीलाई सत्यताका साथ उत्पन्न गऱ्यो,[१] त्यो त्यसभन्दा सर्वोच्च छ, जुन मुश्रिक (मिश्रणवादी) गर्दछन् ।

خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ بِالْحَقِّ ؕ تَعٰلٰی عَمَّا يُشْرِكُوْنَ ③

(४) उसले मनुष्यलाई वीर्यबाट पैदा गऱ्यो अनि त्यो स्पष्ट झगडा गर्ने बनिहाल्यो ।[२]

خَلَقَ الْاِنْسَانَ مِنْ نُّطْفَةٍ فَاِذَا هُوَ خَصِيْمٌ مُّبِيْنٌ ④

(५) उसैले पशु पैदा गऱ्यो, जसमा तिम्रा निम्ति गर्मीका वस्त्र छन्, तथा अन्य पनि धेरै लाभ छन्,[३] तथा उनीहरूमध्ये केहीलाई तिमीले खान्छौ ।

وَالْاَنْعَامَ خَلَقَهَا ۚ لَكُمْ فِيْهَا دِفْءٌ وَّمَنَافِعُ وَمِنْهَا تَاْكُلُوْنَ ⑤

(६) तथा उनीहरूमा तिम्रो निम्ति एउटा सौन्दर्य पनि छ, जब चराएर ल्याउछौ त्यतिखेर पनि र जब चराउन लैजान्छौ, त्यसबेला पनि ।[४]

وَلَكُمْ فِيْهَا جَمَالٌ حِيْنَ تُرِيْحُوْنَ وَحِيْنَ تَسْرَحُوْنَ ⑥

[१]अर्थात् मात्र आनन्द, आमोद-प्रमोद एवं खेलकूदको लागि बनाएको होइन, बरु एउटा उद्देश्य छ तथा त्यो हो उपहार तथा दण्ड, जस्तो कि विस्तारले अघि गुज्रिसकेको छ ।

[२]अर्थात् एउटा निर्जीव वस्तुबाट जुन एउटा जीवधारीका भित्रबाट निस्कन्छ, जसलाई वीर्य भनिन्छ, त्यसलाई विभिन्न अवस्थाहरूबाट गुजारेर एउटा पूर्णरूप प्रदान गर्दछ, अनि त्यसमा अल्लाह तआला आत्मा फुक्छ तथा माताको गर्भबाट निकालेर संसारमा ल्याउँछ, जसमा त्यो जीवन व्यतीत गर्दछ, परन्तु जब उसलाई बुद्धिको विकास हुन्छ त उसै प्रभुको कुरामा विवाद गर्दछ, उसलाई अस्वीकार गर्दछ अथवा उसँग अन्यलाई साझेदार ठहराउँछ ।

[३]यस (अनुग्रह) का साथ अन्य अनुग्रहको वर्णन गऱ्यो कि चौपायाहरू (ऊँट, गाई तथा बाखाहरू) पनि उसैले सृष्टि गऱ्यो, जसको रौंबाट तिमी ऊन तथा गरम कपडा तयार गरी गर्मी प्राप्त गर्दछौ । यसैप्रकार उनीबाट अन्य लाभ प्राप्त गर्दछौ, जस्तै उनीसित दूध प्राप्त गर्दछौ, उनीमाथि सवारी गर्दछौ तथा भारी बोकाउँछौ, उनीहरूद्वारा हलो चलाउँछौ तथा खेतहरूको सिंचाइ गर्दछौ आदि ।

[४](تُرِيْحُوْنَ) को अर्थ हो बेलुका चराएर घर फर्काउँछौ, (تسرحون) जब प्रातः चराउनको लागि लैजान्छौ, यी दुबै समयहरूमा यिनी मानिसहरूका दृष्टिमा आउँछन् जसबाट तिम्रो सौन्दर्य तथा सुन्दरता बृद्धि हुन्छ । यी दुबै समयका (अतिरिक्त उनीहरू दृष्टिबाट ओझेल रहन्छन अथवा खोरहरूमा बन्द रहन्छन् ।

وَتَحْمِلُ أَثْقَالَكُمْ إِلَىٰ بَلَدٍ لَّمْ تَكُونُوا بَالِغِيهِ إِلَّا بِشِقِّ الْأَنفُسِ ۚ إِنَّ رَبَّكُمْ لَرَءُوفٌ رَّحِيمٌ ⑦

(७) तथा उनीहरूले तिम्रो भारी ती नगरहरूसम्म बोकेर लग्छन्, जहाँ तिमी ठूलो परिश्रम बिना पुग्न सक्दैनथ्यौ । निःसन्देह तिम्रो प्रभु निकै नै करूणाकारी तथा अत्यन्त कृपालु छ ।

وَالْخَيْلَ وَالْبِغَالَ وَالْحَمِيرَ لِتَرْكَبُوهَا وَزِينَةً ۚ وَيَخْلُقُ مَا لَا تَعْلَمُونَ ⑧

(८) तथा घोडाहरूलाई, खच्चरहरूलाई, गधाहरूलाई (उसले सृष्टि गऱ्यो) ताकि तिमीले उनलाई यातायातको साधनको रूपमा प्रयोगमा ल्याउन सक तथा उनी शोभाका साधन पनि हुन् ।[1] अन्य पनि त्यसल

[1]अर्थात् उनलाई पैदा गर्नुको मूल उद्देश्य एवं लाभ त उनीमाथि सवारी गर्नु हो, तैपनि यिनीहरू शोभाका लागि हुन् । घोडा, खच्चर तथा गधाहरूको अलग्गैबाट वर्णन गर्नाले केही विचारकहरूले अर्थ निकालेका छन् कि घोडा पनि त्यसैप्रकार निषेध (हराम) छ जुनप्रकार गधा तथा खच्चर । त्यसका अतिरिक्त उपभोग गरिने पशुहरूको वर्णन अघि आइसकेको छ । अतः यस आयतमा जुन तीन पशुहरूको वर्णन छ, यी केवल बाहन (सवारी) का लागि हुन् । तर यो अर्थ यसकारण उचित छैन किनकि हदीसमा घोडा खानुको औचित्य प्रमाणित छ । आदरणीय जाबिर (رضی الله عنه) को कथन छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले घोडाहरूको मासु खानुको अनुमति दिनुभएको छ । (أَذِنَ فِي لُحُومِ الْخَيْلِ) (सहीह बुख़ारी किताबुल ज़बाएह बाबु लुहूमिल ख़ैले तथा सहीह मुस्लिम किताबुस सैदे बाब फी अकले लुहुमिल ख़ैले) । यसका अतिरिक्त सहाबा किरामले नबी सल्लल्लाहु अलैहि वसल्लमका उपस्थितिमा ख़ैबर तथा मदीनामा घोडालाई वध गरी त्यसको मासु पकाए तथा खाए, उहाँ सल्लल्लाहु अलैहि वसल्लमले मना गर्नु भएन । (हेर्नुस् सहीह मुस्लिम उपरोक्त वर्णित अध्यायमा तथा मुसनद अहमद भाग ३, पृष्ठ ३५६ र अबू दाऊद किताबुल अत्एमः, बाब फी अकले लुहुमिल ख़ैले) यसकारण अधिकांश आलिम तथा सलफ तथा उनका पश्चातका अधिकांश, घोडाको मासु उचित (हलाल) हुनुको पक्षमा छन् । (तफ़सीर इब्ने कसीर) यहाँ घोडाको वर्णन सवारीको विषयमा यसकारण गरिएको छ कि यसको अधिकतर प्रयोग यसै उद्देश्यले छ, त्यो सम्पूर्ण संसारमा यति मुल्यवान छ कि यसको भोजनको रूपमा प्रयोग अत्याधिक कठिन छ । भेंडा, बाखाको जस्तै यसलाई वध गरिदैन । तर यसको अर्थ होइन कि यसलाई बिना कुनै प्रमाण अनुचित (हराम) ठहराइयोस् ।

यस्ता कुराहरू पैदा गर्दछ जसको तिमीलाई ज्ञान पनि छैन ।[1]

(९) तथा अल्लाहको काम सोझो मार्ग भनिदिनु हो ।[2] तथा केही बाङ्गा मार्ग छन् । तथा यदि त्यसले चाहेको भए तिमी सबैलाई सोझो मार्गमा लगाइदिन्थ्यो ।[3]

وَعَلَى اللَّهِ قَصْدُ السَّبِيلِ وَمِنْهَا جَآئِرٌ وَلَوْ شَآءَ لَهَدَىٰكُمْ أَجْمَعِينَ ۝٩

(१०) त्यसैले नै तिम्रो लागि आकाशबाट वर्षा गर्दछ, जसलाई तिमी पिउँछौ पनि तथा त्यसैबाट उम्रेका वृक्ष तथा बनस्पतिहरूमा आफ्ना पशुहरू चराउँछौ ।

هُوَ الَّذِىٓ أَنزَلَ مِنَ السَّمَآءِ مَآءً لَّكُم مِّنْهُ شَرَابٌ وَمِنْهُ شَجَرٌ فِيهِ تُسِيمُونَ ۝١٠

(११) यसैबाट त्यसले तिम्रो लागि खेती एवं जैतून तथा खजूर र अंगूर एवं हरप्रकारको फल उब्जाउँछ । निःसन्देह विचार गर्ने मानिसहरूका लागि त यसमा निकै निशानीहरू छन् ।[4]

يُنۢبِتُ لَكُم بِهِ الزَّرْعَ وَالزَّيْتُونَ وَالنَّخِيلَ وَالْأَعْنَٰبَ وَمِن كُلِّ الثَّمَرَٰتِ إِنَّ فِى ذَٰلِكَ لَءَايَةً لِّقَوْمٍ يَتَفَكَّرُونَ ۝١١

[1]धर्तीको तल्लो भागमा, यसैप्रकार समुद्रमा, तथा निर्जल मरूस्थलमा तथा बनहरूमा अल्लाह तआला जीवधारी उत्पन्न गर्दछ, जसका ज्ञान अल्लाहका अतिरिक्त कसैलाई छैन तथा त्यसैमा मनुष्यद्वारा निर्मित कुराहरू पनि आउँछन्, जुन अल्लाहद्वारा प्रदान गरिएको बुद्धि तथा विचारलाई प्रयोग गर्दै उसैबाट उत्पन्न गरिएका विभिन्न कुराहरूलाई विभिन्न प्रकारले जोडेर निर्मित गर्दछ, जस्तै बस, कार, रेलगाडी, जहाज तथा वायुयान एवं यसै प्रकारका असंख्य वस्तुहरू तथा जुन भविष्यमा पनि आइरहनेछ ।

[2]यसको एउटा अर्थ हो "तथा अल्लाहमा नै निहित छ, सोझो मार्ग ।" अर्थात् त्यसको वर्णन गर्नु । अतः उसले त्यसलाई वर्णित गरिदियो तथा प्रकाश र अन्धकार दुबैलाई स्पष्ट गरिदियो, यसैले अगाडी भन्यो कि केही बाङ्गा मार्ग छन् अर्थात् विचलित गर्नेखालका छन् ।

[3]तर यसमा दवाव हुन्थ्यो तथा मनुष्यको परीक्षा हुन्नथ्यो, यसकारण अल्लाहले आफ्ना इच्छाले सबैलाई वाध्य गरेन । वरु दुबै मार्गहरूका विषयमा भनेर मनुष्यलाई आफ्ना इच्छा तथा अधिकारको स्वतन्त्रता प्रदान गरिदियो ।

[4]यसमा वर्षाका ती लाभ वर्णन गरिएका छन्, जसलाई प्रत्येक व्यक्तिले देख्दछ तथा अनुभव गर्दछ, यो कसैलाई भन्न आवश्यक छैन, यसका अतिरिक्त यिनको वर्णन पहिला पनि आइसकेको छ ।

وَسَخَّرَ لَكُمُ الَّيْلَ وَالنَّهَارَ وَالشَّمْسَ وَالْقَمَرَ وَالنُّجُومُ مُسَخَّرٰتٌۢ بِأَمْرِهٖ إِنَّ فِى ذٰلِكَ لَآيٰتٍ لِّقَوْمٍ يَعْقِلُونَ ﴿١٢﴾

(१२) तथा उसैले रात-दिन तथा सूर्य एवं चन्द्रमालाई तिम्रो सेवामा लगाएको छ तथा ताराहरू पनि उसैको आदेशका अधीन छन्। निःसन्देह यसमा बुद्धि भएकाहरूका लागि कैयन् प्रकारका निशानीहरू विद्यमान छन्।[1]

وَمَا ذَرَأَ لَكُمْ فِى الْأَرْضِ مُخْتَلِفًا أَلْوٰنُهُۥٓ إِنَّ فِى ذٰلِكَ لَآيَةً لِّقَوْمٍ يَذَّكَّرُونَ ﴿١٣﴾

(१३) तथा अन्य पनि (थरी-थरीका) वस्तुहरू विभिन्न रङ्ग-रूप भएका उसले तिम्रो लागि धर्तीमा फैलाएको छ। निःसन्देह शिक्षा ग्रहण गर्नेहरूका लागि यसमा निकै ठूला निशानीहरू छन्।[2]

وَهُوَ الَّذِى سَخَّرَ الْبَحْرَ لِتَأْكُلُوا۟ مِنْهُ لَحْمًا طَرِيًّا وَتَسْتَخْرِجُوا۟ مِنْهُ حِلْيَةً تَلْبَسُونَهَا وَتَرَى الْفُلْكَ مَوَاخِرَ فِيهِ وَلِتَبْتَغُوا۟ مِن فَضْلِهِۦ وَلَعَلَّكُمْ تَشْكُرُونَ ﴿١٤﴾

(१४) तथा नदीहरू पनि उसैले तिम्रो वशमा गरिदिएको छ ताकि तिमी यसबाट निस्केको ताजा मासु खाउ तथा त्यसबाट आफूले लगाउने आभूषण निकाल्न सक। र तिमी देख्ने छौ कि डुङ्गाहरू यसमा पानी चिर्दै (तैरन्छन्) तथा यसकारण पनि कि तिमीले त्यसको कृपाको खोजी गर तथा हुनसक्छ कि तिमी कृतज्ञता पनि व्यक्त गर।[3]



[1]कुन प्रकारले रात तथा दिन साना तथा ठूला हुन्छन्, चन्द्रमा तथा सूर्य कुन प्रकारले आफ्ना लक्ष्यतिर अग्रसर छन् उनीहरूमा कुनै अन्तर उत्पन्न हुँदैन, ताराहरू कुन किसिमले आकाशको शोभा छन् तथा रातका अँध्यारोमा बाटो गुमिएका मानिसहरू तथा यात्रीहरूका लागि पथ-प्रदर्शक छन्। यी सबै अल्लाह तआलाको पूर्ण सामर्थ्य तथा विस्तृत राज्यका प्रमाण हुन्।

[2]अर्थात् धर्तीमा अल्लाहले जुन खनिज, वनस्पति, निर्जीव तथा जीवधारी एवं उनीहरूबाट हुने लाभ तथा विशेषता उत्पन्न गरेको छ, तिनमा पनि शिक्षा प्राप्त गर्नेहरूका लागि निशानीहरू छन्।

[3]यसमा समुद्रमा तीव्र धाराहरूलाई मनुष्यको अधीन गरिदिनुको वर्णनका साथै, त्यसका तीन लाभ पनि वर्णित गरेका छन्। एउटा यो कि त्यसबाट माछाको रूपमा ताजा मासु खान्छौ तथा माछा मरेको भएपनि हलाल छ।

وَأَلْقَىٰ فِي الْأَرْضِ رَوَاسِيَ أَن تَمِيدَ بِكُمْ وَأَنْهَارًا وَسُبُلًا لَّعَلَّكُمْ تَهْتَدُونَ ﴿١٥﴾

(१५) तथा उसले धर्तीमा गाडि पर्वत स्थापित गरिदियो ताकि तिमीलाई लिएर नहल्लोस् ।[1] तथा नदीहरू एवं मार्ग बनाइदियो ताकि तिमी लक्ष्यसम्म पुग ।[2]

وَعَلَامَاتٍ ۚ وَبِالنَّجْمِ هُمْ يَهْتَدُونَ ﴿١٦﴾

(१६) अन्य पनि धेरै निशानीहरू (निर्धारित गर्‍यो) । तथा ताराहरूबाट पनि मानिसहरू मार्ग-प्राप्त गर्छन् ।

أَفَمَن يَخْلُقُ كَمَن لَّا يَخْلُقُ ۗ أَفَلَا تَذَكَّرُونَ ﴿١٧﴾

(१७) त के त्यो जसले सृष्टि गर्दछ, त्यो जस्तो छ जसले सृष्टि गर्न सक्दैन ? के तिमीले कदापि साच्दैनौ ?[3]

यहाँसम्मकि एहरामको अवस्थामा पनि त्यसको शिकार हलाल (वैध) छ । दोस्रो कुरा त्यसबाट तिमी मोती, सीपहरू, (जवाहेरात) निकाल्दछौ । तेस्रो यसमा तिमी डुङ्गा तथा जहाज चलाउँछौ, जसद्वारा तिमी एक देशबाट अर्को देशमा जान्छौ, व्यापारिक सामाग्रीहरू पनि ल्याउँछौ, लैजान्छौ, जसबाट तिमीलाई अल्लाहको अनुकम्पा प्राप्त हुन्छ जसको लागि तिमी अल्लाहको कृतज्ञ हुनुपर्छ ।

[1]यो पर्वतहरूको लाभ वर्णन गरिदैछ । तथा अल्लाहको एक महान उपकार पनि किनभने यदि धर्ती हल्लिरहन्थ्यो भने त्यो धर्तीमा वास गर्नु नै असम्भव हुन्थ्यो । यसको अनुमान ती भूकम्पहरूबाट लगाउन सकिन्छ जुन क्षणिक अथवा केहीबेरका लागि आउँछन्, तर कसरी अग्ला-अग्ला भवनहरूलाई धराशायी गरी नगरहरूलाई भग्नावशेषमा परिवर्तित गरिदिन्छन् ।

[2]नदीहरूको क्रम पनि विचित्र छ, कहाँबाट उनी प्रारम्भ हुन्छन् तथा कहाँ-कहाँ दायाँ-बायाँ, उत्तर-दक्षिण, पूर्व-पश्चिम प्रत्येक दिशालाई सिञ्चित गर्छन् । यसैप्रकार मार्ग बनायो, जसबाट तिमी आफ्ना लक्ष्यसम्म पुग्दछौ ।

[3]यी सबै अनुकम्पा तथा उपकारहरूको वर्णनबाट एकेश्वरको महत्वलाई स्पष्ट तथा प्रदर्शित गर्‍यो कि अल्लाह त यी सबै वस्तुहरूको स्रष्टा हो, तर उसलाई छोडेर जसको तिमी पूजा गर्दछौ, के उनीहरूले पनि केही उत्पन्न गरेका छन् ? होइन, बरु उनी त स्वयं अल्लाहका सृष्टि हुन् त्यसपछि कसरी स्रष्टा एवं सृष्टि समान हुन सक्छन्, जबकि तिमीले स्वयं उनीहरूलाई ईष्टदेव बनाएर अल्लाहको समान साझीदार ठहराएका छौ ? के तिमी अलिकति पनि विचार गर्दैनौ ?

وَإِنْ تَعُدُّوْا نِعْمَةَ اللّٰهِ لَا تُحْصُوْهَا ۗ إِنَّ اللّٰهَ لَغَفُوْرٌ رَّحِيْمٌ ⑱

(१८) तथा यदि तिमीले अल्लाहका अनुकम्पाहरूको गणना गर्न चाहन्छौ भने तिमीले त्यो गर्न सक्दैनौ। नि:सन्देह अल्लाह बडो क्षमाशील कृपालु छ।

وَاللّٰهُ يَعْلَمُ مَا تُسِرُّوْنَ وَمَا تُعْلِنُوْنَ ⑲

(१९) तथा जति तिमी लुकाउँछौ अथवा व्यक्त गर्दछौ, अल्लाह सबै जान्दछ।[1]

وَالَّذِيْنَ يَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ لَا يَخْلُقُوْنَ شَيْـًٔا وَّهُمْ يُخْلَقُوْنَ ⑳

(२०) तथा ज-जसलाई यिनीहरू अल्लाह (तआ़ला) का अतिरिक्त पुकार्दछन्, उनीहरू कुनै कुरा सृष्टि गर्न सक्दैनन्, बरु उनीहरू स्वयं पैदा गरिएका छन्।[2]

أَمْوَاتٌ غَيْرُ أَحْيَاۤءٍ ۚ وَمَا يَشْعُرُوْنَ ۙ أَيَّانَ يُبْعَثُوْنَ ㉑

(२१) (तिनीहरू) मृत छन्, जीवित छैनन्,[3] उनीहरूलाई थाहा छैन कि उनीहरू कहिले उठाइनेछन्।[4]

إِلٰهُكُمْ إِلٰهٌ وَّاحِدٌ ۚ فَالَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ قُلُوْبُهُمْ

(२२) तिमी सबैको पूज्य मात्र अल्लाह (तआ़ला) एक्लो हो तथा परलोक (आख़िरत) मा ईमान

[1]तथा यसका अनुसार त्यसले क़ेयामतका दिन फल तथा दण्ड दिनेछ। सत्कर्मीहरूलाई सत्कर्मको प्रतिफल प्राप्त हुनेछ तथा कुकर्मीहरूलाई कुकर्मको दण्ड।

[2]यसमा एउटा वस्तुको अधिकता छ अर्थात् विशेष गुण (रचयिता हुनु) को इन्कारका साथ न्यूनता अर्थात् कमी (रचयिता नहुनु) लाई प्रमाणित गर्नु। (फ़तहुल क़दीर)

[3]मृतबाट तात्पर्य ती पाषाण (ढुङ्गा) पनि हुन्, जुन निर्जीव तथा निर्बोध छन् तथा मरेका महात्मा पनि हुन्, किनभने मरे पश्चात उठाइनु (जसको उनलाई ज्ञान छैन) त्यो त निर्जीवको अतिरिक्त महात्माको लागि पनि सत्य सिद्ध हुनसक्दछ। उनलाई केवल मृत भनेन, वरु अझ अधिक स्पष्ट गरिदियो कि "उनी जीवित छैनन्।" यसबाट कब्र पूजन गर्नेहरूको पनि स्पष्ट खण्डन हुन्छ, जो भन्दछन् कि कब्रमा गाडिएका मृत छैनन्, जीवित छन् तथा हामी जीवितहरूलाई नै पुकार्दछौं। अल्लाह तआ़लाको यस कथनबाट ज्ञात भयो कि मृत्यु भए पश्चात सांसारिक जीवन कसैलाई प्राप्त हुन सक्दैन, न संसारसित उनको कुनै सम्बन्ध शेष रहन्छ।

[4]अनि उनीबाट लाभको तथा पुण्य वा प्रतिफलको आशा कसरी गर्न सकिन्छ ?

मुन्किरतुँव्व हुम मुस्तक्बिरून ﴿مُّنكِرَةٌ وَهُم مُّسْتَكْبِرُونَ ٢٢﴾

नराख्नेवालाहरूका हृदय भ्रष्ट छन् तथा उनी स्वयं गर्वले परिपूर्ण छन् ।[1]

﴿لَا جَرَمَ أَنَّ اللَّهَ يَعْلَمُ مَا يُسِرُّونَ وَمَا يُعْلِنُونَ ۚ إِنَّهُ لَا يُحِبُّ الْمُسْتَكْبِرِينَ ٢٣﴾

(२३) निःसन्देह अल्लाह (तआ़ला) प्रत्येक त्यस कुरालाई जसलाई उनीहरूले लुकाउँछन् तथा जसलाई व्यक्त गर्दछन्, राम्ररी जान्दछ, त्यसले अभिमानीहरूलाई प्रिय ठान्दैन ।[2]

﴿وَإِذَا قِيلَ لَهُم مَّاذَا أَنزَلَ رَبُّكُمْ ۙ قَالُوا أَسَاطِيرُ الْأَوَّلِينَ ٢٤﴾

(२४) तथा उनीहरूसित जब सोधिन्छ कि तिम्रो प्रभुले के उतारेको छ, त उत्तर दिन्छन् कि पूर्वजका कथाहरू हुन् ।[3]

---

[1]अर्थात् एक पूज्यलाई मान्नु नास्तिक तथा अनेकेश्वरवादीहरूका लागि अत्यन्त कठिन छ । उनीहरू भन्दछन् ।

﴿أَجَعَلَ الْآلِهَةَ إِلَٰهًا وَاحِدًا ۖ إِنَّ هَٰذَا لَشَيْءٌ عُجَابٌ﴾

"उसले सबै पूजनीयहरूलाई एउटै पूज्य गरिदियो, यो त अत्यन्त विचित्र कुरो हो ।" (सूरः साद-५) अन्य स्थानमा भन्यो :

﴿وَإِذَا ذُكِرَ اللَّهُ وَحْدَهُ اشْمَأَزَّتْ قُلُوبُ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ ۖ وَإِذَا ذُكِرَ الَّذِينَ مِن دُونِهِ إِذَا هُمْ يَسْتَبْشِرُونَ﴾

"जब एक अल्लाहको वर्णन गरिन्छ तब आख़िरतलाई नकार्नेवालाहरूको हृदय संकुचित हुन जान्छन् तथा जब अल्लाहका अतिरिक्त अन्य देवताहरूको वर्णन गरिन्छ तव प्रसन्न हुन्छन् । (सूरः अज्जुमर-४५)

[2](استكبار) को अर्थ हुन्छ आफूलाई ठूलो ठान्दै सत्य तथा उचित कुरोलाई अस्वीकार गरिदिनु तथा अन्य व्यक्तिहरूलाई तुच्छ एवं हीन ठान्नु । (كبر) को यही परिभाषा हदीसमा पनि वर्णन गरिएको छ । (सहीह मुस्लिम, किताबुल ईमान, बाब तहरीमिल किब्रे व बयानेहि) यो घमण्ड तथा अहङ्कार अल्लाहलाई अति अप्रिय छ । हदीसमा छ कि त्यो व्यक्ति स्वर्गमा जाने छैन, जसको हृदयमा लेश मात्र पनि घमण्ड हुनेछ । (उपरोक्त सन्दर्भ)

[3]अर्थात् विमुखता तथा उपहासको प्रदर्शन गर्दै यिनीले झूटा उत्तर दिन्छन् कि अल्लाह तआ़लाले त केही अवतरित गरेको छैन तथा यो मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) हामीलाई जे पढेर सुनाउँछ, ती त पूर्वकालका कथाहरू हुन्, जुन कहींबाट सुनेर वर्णन गर्दछ ।

لِيَحْمِلُوٓا۟ أَوْزَارَهُمْ كَامِلَةً يَوْمَ الْقِيَٰمَةِ ۙ وَمِنْ أَوْزَارِ الَّذِينَ يُضِلُّونَهُم بِغَيْرِ عِلْمٍ ۗ أَلَا سَآءَ مَا يَزِرُونَ ﴿٢٥﴾

(२५) (यसको परिणाम यो हुनेछ) कि केयामतका दिन यिनीहरू आफ्ना पूर्ण बोझका साथ नै उनका बोझका पनि भागीदार हुनेछन् जसलाई अज्ञानताका कारण पथभ्रष्ट गरिरहे । हेर त कस्ता नराम्रो बोझ बोकिराखेका छन् ।[1]

قَدْ مَكَرَ الَّذِينَ مِن قَبْلِهِمْ فَأَتَى اللَّهُ بُنْيَٰنَهُم مِّنَ الْقَوَاعِدِ فَخَرَّ عَلَيْهِمُ السَّقْفُ مِن فَوْقِهِمْ وَأَتَىٰهُمُ الْعَذَابُ مِنْ حَيْثُ لَا يَشْعُرُونَ ﴿٢٦﴾

(२६) उनीभन्दा पहिलाका मानिसहरूले पनि छल गरेका थिए । (अन्त्यमा) अल्लाहले उनका (षड्यन्त्रका) घरहरूलाई जरैदेखि उखेलिदियो तथा उनको (टाउकामाथि) छतहरू माथिबाट खसिहाले ।[2] तथा उनका पासमा प्रकोप त्यहाँबाट आइपुग्यो, जसको उनीहरूलाई ध्यान तथा विचार पनि थिएन ।[3]

[1]अर्थात् उनका मुखबाट यो कुरा अल्लाह तआलाले भन्न लगायो ताकि उनीहरू आफ्ना भारीका अतिरिक्त अरुहरूको पनि बोझ उठाऊन् । जस्तो कि हदीसमा वर्णित छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : "जसले मानिसहरूलाई सन्मार्गतिर आव्हान गऱ्यो, त्यस व्यक्तिलाई ती सबै व्यक्तिहरूको पनि प्रतिफल प्राप्त हुनेछ, जो त्यसको आमन्त्रणमा सत्यको मार्ग अपनाउनेछन् तथा जसले पथ-विचलनतिर बोलायो, उसलाई ती सबै मानिसहरूका पापको भार पनि बोक्नु पर्नेछ जो त्यसको प्रयत्नमा विचलित भए ।" (अबू दाऊद किताबुस सुन्नः बाबु लोजूमिस सुन्नः)

[2]केही व्याख्याकारहरू इस्राईली कथाहरूको आधारमा भन्छन् कि यसबाट तात्पर्य नमरूद अथवा बुख्त नस्सर हो, जसले कुनै प्रकार आकाशतिर उक्लेर अल्लाहका विरूद्ध षडयन्त्र गरे, तर उनीहरू विफल भई फर्के तथा केही व्याख्याकारहरूका निकट एउटा उदाहरण हो, जसबाट यो भन्नु उद्देश्य हो कि अल्लाहसँग कुफ्र तथा साझी बनाउनेहरूका कर्म यसैप्रकार विफल हुनेछन्, जुनप्रकार कुनै घरको जग हल्लियोस् तथा त्यो छतसहित भत्केर जाओस् । तर अधिक उचित कुरो यो लाग्छ कि यसको उद्देश्य ती समुदायहरूको परिणामतिर संकेत गर्नु हो, जुन समुदायले पैगम्बरहरूलाई निरन्तर असत्य भने तथा अन्त्यमा अल्लाहका प्रकोपको भोगी भई आफ्ना घरहरूसहित ध्वस्त हुन पुगे । जस्तै आदको समुदाय तथा लूतका समुदाय आदि ।

[3]जस्तो अन्य स्थानमा छ । ﴿مِنْ حَيْثُ لَمْ يَحْتَسِبُوا﴾

ثُمَّ يَوْمَ الْقِيٰمَةِ يُخْزِيْهِمْ وَيَقُولُ أَيْنَ شُرَكَآءِيَ الَّذِيْنَ كُنْتُمْ تُشَآقُّوْنَ فِيْهِمْ ۚ قَالَ الَّذِيْنَ أُوْتُوا الْعِلْمَ إِنَّ الْخِزْيَ الْيَوْمَ وَالسُّوْٓءَ عَلَى الْكٰفِرِيْنَ ﴿٢٧﴾

(२७) अनि क़यामतका दिन पनि अल्लाह (तआला) ले उनीहरूलाई अपमानित गर्नेछ तथा भन्नेछ कि मेरा ती साझीदारहरू कहाँ छन्, जसका विषयमा तिमीले वाद-विवाद गर्दथ्यौ ।[1] जसलाई ज्ञान दिइएको थियो, उनीहरूले उत्तर दिनेछन्[2] कि आज त इन्कार गर्नेहरूलाई अपमान तथा ख़राबीले छोपिहाल्यो ।

الَّذِيْنَ تَتَوَفّٰىهُمُ الْمَلٰٓئِكَةُ ظَالِمِيْٓ أَنْفُسِهِمْ ۖ فَأَلْقَوُا السَّلَمَ مَا كُنَّا نَعْمَلُ مِنْ سُوْٓءٍ ۚ بَلٰٓى

(२८) उनीहरू जसले आफ्ना प्राणहरूमाथि अत्याचार गर्दछन्, फरिश्ताहरूले जब उनका प्राण निकाल्न थाल्छन् त त्यसबेला उनीहरूले सन्धिका कुरा गर्दछन् कि हामी कुनै नराम्रो काम गर्दैनथ्यौं ।[3] किन होइन ? अल्लाह

"तसर्थ अल्लाह (को प्रकोप) उनको पासमा यस्तो स्थानबाट आयो जसवारे उनीहरूले कहिले सोचेका पनि थिएनन् ।" (सूर: अल-हस्र-२)

[1]अर्थात् यी त ती प्रकोप थिए जुनकि उनीमाथि संसारमा आए तथा क़ेयामतका दिन अल्लाह तआला उनीहरूलाई यसप्रकार अपमानित तथा निरादार गर्नेछ कि उनीसित सोध्नेछ, तिम्रा ती भागीदार कहाँ छन्, जुन तिमीले मेरा लागि बनाएको थियौ तथा जसका कारण तिमी निष्ठावानहरूसित झगडा गर्दथ्यौ ।

[2]अर्थात् जसलाई धर्मको ज्ञान थियो, उनीहरू धर्ममा दृढ थिए, उनीहरूले उत्तर दिनेछन् ।

[3]यो मूर्तिपूजक अत्याचारीहरूको मृत्युको समयको अवस्थाको वर्णन हो । जब फरिश्ताहरू उनका प्राण निकाल्दछन्, त्यसबेला उनी आज्ञाकारी भई सन्धिको कुरा गर्दछन् अर्थात् सुन्ने, मान्ने तथा लाचारीको प्रदर्शन गर्दै भन्दछन् कि हामी त नराम्रो कुरा गर्दैनथ्यौं । जस्तै प्रलयको मैदानमा अल्लाह समक्ष पनि झूटो कसम खानेछन् तथा भन्नेछन् :

﴿وَاللّٰهِ رَبِّنَا مَا كُنَّا مُشْرِكِيْنَ﴾

"अल्लाहको सौगन्ध हामी मुश्रिक (मिश्रणवादी) थिएनौं ।" (सूर: अल-अनाम-२३)अन्य स्थानमा अल्लाहको आदेश छ :

﴿يَوْمَ يَبْعَثُهُمُ اللّٰهُ جَمِيْعًا فَيَحْلِفُوْنَ لَهُ كَمَا يَحْلِفُوْنَ لَكُمْ﴾

"जुन दिन अल्लाह तआलाले ती सबैलाई जीवित पारी (आफ्नो समक्ष एकत्रित गर्नेछ) त त्यस समक्ष पनि यिनीहरू यसैप्रकार (झूठो कसम खानेछन्, जुनप्रकार तिम्रो समक्ष कसम खान्छन् ।" (सूर: अल-मुजादिल:-१८)

إِنَّ ٱللَّهَ عَلِيمٌۢ بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٢٨﴾

(तआ़ला) राम्ररी जान्दछ, जे-जति तिमीले गर्दथ्यौ ।[1]

فَٱدْخُلُوٓا۟ أَبْوَٰبَ جَهَنَّمَ خَٰلِدِينَ فِيهَا ۖ فَلَبِئْسَ مَثْوَى ٱلْمُتَكَبِّرِينَ ﴿٢٩﴾

(२९) त अब तिमी सधैंको लागि नरकका द्वारहरू (बाट नरक) मा प्रवेश गर,[2] अतः यो अहङ्कारीहरूको साह्रै नराम्रो स्थान हो ।

وَقِيلَ لِلَّذِينَ ٱتَّقَوْا۟ مَاذَآ أَنزَلَ رَبُّكُمْ ۚ قَالُوا۟ خَيْرًا ۗ لِّلَّذِينَ أَحْسَنُوا۟ فِى هَٰذِهِ ٱلدُّنْيَا حَسَنَةٌ ۚ وَلَدَارُ ٱلْءَاخِرَةِ خَيْرٌ ۚ وَلَنِعْمَ دَارُ ٱلْمُتَّقِينَ ﴿٣٠﴾

(३०) तथा सदाचारीहरूसित प्रश्न गरिन्छ कि तिम्रो पालनकर्ताले के अवतरित गरेको छ ? त उनीहरू उत्तर दिन्छन् कि जुन सबैभन्दा उत्तम छ । जसले सत्कर्म गरे उनको लागि यस लोकमा भलाई छ र परलोकको घर त अति उत्तम छँदै छ । र कति राम्रो घर छ सदाचारीहरूको लागि !

جَنَّٰتُ عَدْنٍ يَدْخُلُونَهَا تَجْرِى مِن تَحْتِهَا ٱلْأَنْهَٰرُ ۖ لَهُمْ فِيهَا مَا يَشَآءُونَ ۚ كَذَٰلِكَ يَجْزِى ٱللَّهُ ٱلْمُتَّقِينَ ﴿٣١﴾

(३१) सधैं रहने बगैंचाहरूमा उनीहरू जानेछन्, जसमा नहरहरू बगिराखेका हुनेछन्, जे उनीहरूले माग गर्नेछन्, त्यहाँ उनको लागि उपस्थित हुने छन् सदाचारीहरूलाई अल्लाह यस्तै प्रतिफल प्रदान गर्दछ ।

ٱلَّذِينَ تَتَوَفَّىٰهُمُ ٱلْمَلَٰٓئِكَةُ طَيِّبِينَ ۙ يَقُولُونَ سَلَٰمٌ عَلَيْكُمُ

(३२) उनीहरू जसका आत्मा (प्राण) फरिश्ताहरू यस अवस्थामा ग्रस्त गर्दछन् जबकि उनीहरू स्वच्छ पवित्र हुन्छन्, त उनीहरू (फरिश्ताहरू) भन्छन्, तिम्रो लागि शान्ति छ, आफ्ना

[1]फरिश्ताहरू उत्तर दिनेछन्, किन होइन ? अर्थात तिमी झूटो बोल्दछौ । तिम्रो त पूरा उमेर नै नराम्रो कुरामा व्यतीत भएको छ । तथा अल्लाहको पासमा तिम्रा सबै कर्महरूको लेख सुरक्षित छ, तिम्रो यस इन्कारबाट के हुनेछ ?

[2]इमाम इब्ने क़सीर भन्दछन् कि उनका मृत्यु पश्चात तुरुन्तै उनका आत्माहरू नरक़मा जान्छन् तथा उनका शव समाधि (चिहान) मा रहन्छन् जहाँ अल्लाह आफ्नो सामर्थ्यले शरीर तथा आत्मामा दूरी हुँदा-हुँदै पनि एक प्रकारको सम्बन्ध पैदा गरी यातना दिन्छ तथा प्रातः बेलुका उनीमाथि आगो प्रस्तुत गरिन्छ । अनि जब प्रलय स्थापित हुनेछ, त्यतिखेर उनको आत्मा उनका शरीरहरूमा पुनः आउनेछन् तथा उनी सधैंका लागि नरकमा हालिनेछन् ।

ادۡخُلُوا الۡجَنَّةَ بِمَا كُنۡتُمۡ تَعۡمَلُوۡنَ ﴿٣٢﴾

आफ्ना कर्महरूका प्रतिफल स्वरुप, जुन तिमीले गरिराखेका थियौ, स्वर्गमा जाउ ।[1]

هَلۡ يَنۡظُرُوۡنَ اِلَّاۤ اَنۡ تَاۡتِيَهُمُ الۡمَلٰۤٮِٕكَةُ اَوۡ يَاۡتِىَ اَمۡرُ رَبِّكَ‌ؕ كَذٰلِكَ فَعَلَ الَّذِيۡنَ مِنۡ قَبۡلِهِمۡ‌ؕ وَمَا ظَلَمَهُمُ اللّٰهُ وَلٰـكِنۡ كَانُوۡۤا اَنۡفُسَهُمۡ يَظۡلِمُوۡنَ ﴿٣٣﴾

(३३) के यिनीहरू यस कुराको प्रतिक्षा गरिराखेका छन् कि उनका पासमा फरिश्ताहरू आउन् अथवा तिम्रो प्रभुको आदेश आइहालोस् ?[2] यस्तै ती मानिसहरूले पनि गरे, जो यिनीभन्दा पूर्व थिए ।[3] उनीहरूमाथि अल्लाह (तआला) ले कुनै अत्याचार गरेन ।[4] बरु उनीहरूले स्वयं आफ्ना प्राणमाथि अत्याचार गरिरहे ।

فَاَصَابَهُمۡ سَيِّاٰتُ مَا عَمِلُوۡا وَحَاقَ بِهِمۡ مَّا كَانُوۡا بِهٖ يَسۡتَهۡزِءُوۡنَ ﴿٣٤﴾

(३४) अन्तत: उनका कुकर्महरूको कुफल उनलाई प्राप्त भयो तथा जुन कुराको उपहास गर्दथे, त्यसले उनलाई घेरिहाल्यो ।[5]

---

[1] यी आयतहरूमा अत्याचारी मूर्तिपूजकहरूको तुलनामा ईमान भएकाहरूको आचरण एवं उनको शुभअन्त (परिणाम) को वर्णन गरिएको छ ।

[2] अर्थात् के उनीहरू पनि त्यस समयको प्रतिक्षा गरिराखेका छन् जब फरिश्ताहरू उनका आत्मा निकाल्नेछन् अथवा प्रभुको आदेश (अर्थात् प्रकोप अथवा क़ेयामत) आउनेछ ।

[3] अर्थात् यसप्रकारको दुष्टता तथा अवज्ञा, उनीभन्दा पूर्वका मानिसहरूले पनि अपनाए जस कारण उनीहरू अल्लाहको क्रोधका अधिकारी बने ।

[4] यसकारण कि अल्लाहले उनका निम्ति कुनै बहाना नै शेष छोडेन । रसूलहरूलाई पठाएर तथा किताबलाई अवतरित गरेर उनीमाथि तर्कलाई पूर्ण गरिदियो ।

[5] अर्थात् रसूलहरूको विरोध तथा उनलाई झुट्लाएर स्वयं नै उनीहरूले आफूमाथि अत्याचार गरे ।

[6] अर्थात् जब रसूल उनीसित भन्दछन् कि यदि तिमी उनीमाथि ईमान ल्याउँदैनौ भने अल्लाहको प्रकोप आउनेछ, त्यतिखेर यिनीहरू उपहासस्वरुप भन्दथे कि जाउ आफ्नो अल्लाहसित भनिदेउ कि त्यसले प्रकोप पठाएर हामीलाई नाश गरिदेओस् । अत: त्यस प्रकोपले उनीहरूलाई घेरिहाल्यो, जसको उनी उपहास गर्दथे, अनि त्यसबाट सुरक्षाको कुनै मार्ग उनीसित रहेन ।

وَ قَالَ الَّذِيْنَ اَشْرَكُوْا لَوْ شَآءَ اللّٰهُ مَا عَبَدْنَا مِنْ دُوْنِهٖ مِنْ شَيْءٍ نَّحْنُ وَلَآ اٰبَآؤُنَا وَلَا حَرَّمْنَا مِنْ دُوْنِهٖ مِنْ شَيْءٍ ؕ كَذٰلِكَ فَعَلَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۚ فَهَلْ عَلَى الرُّسُلِ اِلَّا الْبَلٰغُ الْمُبِيْنُ ﴿٣٥﴾

(३५) तथा मिश्रणवादीहरू (मुश्रिक) ले भने यदि अल्लाह (तआ़ला) ले चाहेको भए हामी तथा हाम्रा पूर्वजले त्यसका अतिरिक्त अन्यको पूजा गर्दैनथे, न उसको आदेशबिना कुनै कुरालाई अवैध ठहराउँथे। यही कर्म उनीभन्दा पूर्वका मानिसहरूले पनि गरे । तसर्थ रसूलहरूको कार्य त केवल स्पष्टरूपले सन्देश पुऱ्याइदिनु हो ।[1]

وَلَقَدْ بَعَثْنَا فِيْ كُلِّ اُمَّةٍ رَّسُوْلًا اَنِ اعْبُدُوا اللّٰهَ وَاجْتَنِبُوا الطَّاغُوْتَ ۚ فَمِنْهُمْ مَّنْ هَدَى اللّٰهُ

(३६) तथा हामीले प्रत्येक समुदायमा रसूल पठायौं कि (मानिसहरू) ! मात्र अल्लाहको उपासना (इबादत) गर तथा (त्यसबाहेक सबै मिथ्या पूज्यहरू) बाट बच । त केही मानिसहरूलाइ

[1]यस आयतमा अल्लाह तआ़लाले मुश्रिकहरूको एउटा भ्रम तथा भ्रान्ति निवारण गरेको छ, उनीहरूले भन्थे कि हामी जसले अल्लाहलाई छाडेर अरुहरूको पूजा गर्दछौं अथवा त्यसको आदेशविना नै केही वस्तुहरूलाई वर्जित (हरामं) गर्दछौं, यदि हाम्रा यी कुरा अनुचित छन् भने अल्लाह तआ़ला आफ्नो सामर्थ्यले हामीलाई तिनीबाट किन रोक्दैन ? त्यो यदि चाहन्छ भने हामी यी कार्यहरूलाई गर्नै सक्दैनौं । यदि त्यसले रोक्दैन भने यसको अर्थ यो हो कि हामीले जे-जति गरिराखेका छौं, त्यसको इच्छा अनुसार छ । अल्लाह तआ़लाले उनको यस भ्रमको निवारण, "रसूलहरूको कार्य केवल पुऱ्यादिनु हो" भनेर दियो । अर्थ यो हो कि तिम्रो यो भ्रम उचित होइन । अल्लाह तआ़लाले त तिमीलाई यी मिश्रणका कार्यहरूबाट अति कडाईले रोकेको छ । यसकारण प्रत्येक समुदायमा त्यसले रसूल पठाउँदै तथा किताबहरू अवतरित गर्दै आइराखेको छ । तथा प्रत्येक नबीले आएर सर्वप्रथम आफ्नो समुदायलाई शिर्कबाट नै जोगाउने प्रयत्न गरेको छ । यसको स्पष्ट अर्थ यो हो कि अल्लाह तआ़ला कदापि यो चाहँदैन कि मानिसहरू शिर्क गरून् किनभने उसलाई प्रिय भएको भए यिनका खण्डनको निम्ति त्यसले रसूल किन पठाउँथ्यो ? परन्तु यसका उपरान्त पनि तिमीले रसूलहरूलाई झुट्लाएर शिर्कको मार्ग अपनायौ तथा अल्लाहले आफ्नो उत्पत्ति नीतिको कारण बलपूर्वक तथा दबावले रोकेन, त यो उसको विवेक तथा नीतिको एउटा भाग हो जस अन्तर्गत उसले मनुष्यहरूलाई आफ्ना इच्छा अनुरूप सञ्चालित हुने स्वतन्त्रता प्रदान गरेको छ, किनकि यसबिना उनको परीक्षा सम्भव थिएन । हाम्रा रसूलले हाम्रा सन्देश पुऱ्याएर यही सम्झाउँदै गरे कि यस स्वतन्त्रताको दुरूपयोग नगर, बरु त्यसलाई अल्लाहको प्रसन्नताको अनुरुप प्रयोग गर । हाम्रा रसूलले यी नै कुरा गर्न सक्दथे, जुन उनले गरे । तथा तिमीले शिर्क गरेर त्यसको दुरूपयोग गऱ्यौ, जसको दण्ड स्थायी यातना हो ।

وَمِنْهُم مَّنْ حَقَّتْ عَلَيْهِ الضَّلٰلَةُ ۚ فَسِيْرُوْا فِي الْأَرْضِ فَانْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِيْنَ ﴿٣٦﴾

(अल्लाहले मार्गदर्शन प्रदान गऱ्यो तथा केहीमाथि पथ-भ्रष्टता सिद्ध भयो ।[1] अब तिमी स्वयं धर्तीमा भ्रमण गरी हेर कि झुट्लाउनेहरूको परिणाम कस्तो भयो ?

إِنْ تَحْرِصْ عَلٰى هُدٰىهُمْ فَإِنَّ اللّٰهَ لَا يَهْدِيْ مَنْ يُّضِلُّ وَمَا لَهُمْ مِّنْ نّٰصِرِيْنَ ﴿٣٧﴾

(३७) यद्यपि तपाईं उनको मार्गदर्शनका लागि इच्छुक रहँदै आउनु भएको छ तर अल्लाह (तआ़ला) त्यसलाई मार्गदर्शन दिने गर्दैन, जसलाई विचलित गरिदिन्छ तथा यस्ताका लागि कोही सहायक पनि हुँदैन ।[2]

وَأَقْسَمُوْا بِاللّٰهِ جَهْدَ أَيْمَانِهِمْ ۙ لَا يَبْعَثُ اللّٰهُ مَنْ يَّمُوْتُ ۚ بَلٰى وَعْدًا عَلَيْهِ حَقًّا وَّلٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٣٨﴾

(३८) तथा उनीहरूले ठूला-ठूला कसम खाएर भन्दछन् कि मरेर गएका मानिसहरूलाई अल्लाह (तआ़ला) ले जीवित गर्नेछैन ।[3] किन होइन, (अवश्य जीवित गर्नेछ) यो त त्यसको सत्य अनिवार्य वचन हो, परन्तु धेरैजसोले अज्ञानता गरिराखेका छन् ।[4]

[1]वर्णित शंकाको समाधानको लागि अरु अधिक भन्यो कि हामीले प्रत्येक समुदायमा रसूल पठायौं तथा यो सन्देश उनीद्वारा पुऱ्यायौं कि मात्र एउटा अल्लाहको इबादत गर । तर जसलाई विचलन सिद्ध भइसकेको थियो, उनीहरूले यसको चिन्ता नै गरेनन् ।

[2]यसमा अल्लाहले भनिराखेको छ : हे पैग़म्बर ! तिम्रो इच्छा त यही हो कि यी सबैले मार्ग-दर्शनको बाटो अपनाऊन्, परन्तु अल्लाहका नियमहरूका अधीन जो विचलित भइसकेका छन्, उनलाई प्रकाशको मार्गमा तिमी ल्याउन सक्दैनौं । यिनीहरू त आफ्नो अन्तिम परिणामस्वरूप पुगेर नै रहनेछन्, जहाँ यिनलाई कोही सहायता गर्नेछैन ।

[3]किनभने माटोमा मिसिए पश्चात उनीहरू पुन: जीवित हुने, उनीहरूलाई टाढा तथा असम्भव प्रतीत हुन्थ्यो । यसैकारण रसूल जब मृत्यु पश्चात पुन: उभिनुको कुरो भन्दछ, त त्यसलाई झुठ्लाउँछन्, त्यसलाई स्वीकार गर्दैनन्, बरु यसको विपरीत पुन:जीवित नहुने कुरोमा बलपूर्वक एवं पूर्ण विश्वासका साथ कसम खान्छन् ।

[4]यसै अज्ञानता तथा मूर्खताका कारण रसूलहरूको विरोध गर्दै तथा झुठ्लाउँदै कुफ्रको समुद्रमा डुब्छन् ।

(३९) यसकारण पनि कि यिनीहरूले जुन कुरामा भेद गर्दथे, त्यसलाई अल्लाह (तआ़ला) ले प्रष्ट वर्णन गरिदेओस् तथा यसकारण पनि कि काफ़िरले आफू झूठा हुने कुरो जानिहालून् ।[1]

لِيُبَيِّنَ لَهُمُ الَّذِي يَخْتَلِفُونَ فِيهِ وَلِيَعْلَمَ الَّذِينَ كَفَرُوا أَنَّهُمْ كَانُوا كَاذِبِينَ ﴿٣٩﴾

(४०) हामीले जब कुनै कुराको इच्छा गर्दछौं त हामीबाट यति मात्र भन्नु पर्छ "भईहाल" अनि त्यो भईहाल्दछ ।[2]

إِنَّمَا قَوْلُنَا لِشَيْءٍ إِذَا أَرَدْنَاهُ أَنْ نَقُولَ لَهُ كُنْ فَيَكُونُ ﴿٤٠﴾

(४१) तथा जुन मानिसहरूले अत्याचार सहन गरे पश्चात अल्लाहको मार्गमा देश छोडेका छन् ।[3]

وَالَّذِينَ هَاجَرُوا فِي اللَّهِ مِنْ بَعْدِ

[1]यहाँ प्रलय (क़ेयामत) आउने कारण तथा रहस्यको वर्णन भइराखेको छ कि त्यस दिन अल्लाह तआ़ला ती कुराहरूको विषयमा निर्णय गर्नेछ जसमा यी मानिसहरू एक-आपसमा मतभेद राख्दथे तथा सत्यवादी तथा अल्लाहसित तर्सनेहरूलाई राम्रो प्रतिफल तथा अधर्मी तथा अवज्ञाकारीहरूलाई उनका कु-कर्महरूको दण्ड हुनेछ । यसका अतिरिक्त त्यस दिन काफ़िरहरूलाई पनि यो स्पष्ट हुनेछ कि उनी क़ेयामत नआउने कुरोमा जुन सौगन्ध खान्दथे, त्यसमा उनीहरू असत्य थिए ।

[2]अर्थात् मानिसहरूको विचारमा प्रलय (क़ेयामत) घटित हुनु जति पनि कठिन तथा असम्भव होस् परन्तु अल्लाहको लागि त केही कठिन छैन, त्यसलाई धर्ती तथा आकाश ध्वस्त पार्नको निम्ति ती मजदूर, इन्जिनियर तथा मिस्त्रीहरू तथा अन्य संसाधनको आवश्यकता छैन । उसलाई त मात्र शब्द (كن) (कुन) भन्नुछ, त्यसको शब्द (كن) (कुन) ले तुरुन्तै क़ेयामत व्याप्त भइहाल्नेछ ।

﴿ وَمَا أَمْرُ السَّاعَةِ إِلَّا كَلَمْحِ الْبَصَرِ أَوْ هُوَ أَقْرَبُ ﴾

"क़ेयामतको कुरो आँखा चिम्म गर्दाको समय अथवा त्यसभन्दा पनि कम अवधिमा घटित हुनेछ ।" (सूरः अल-नहल-७७)

[3]हिज्‌रतको अर्थ हो कि अल्लाहको धर्मको लागि, अल्लाहको प्रसन्नता प्राप्त गर्नको निम्ति आफ्नो देश, आफ्ना सम्बन्धि तथा मित्र एवं साथीहरूलाई छाडेर यस्तो क्षेत्रमा गईहाल्नु जहाँ सरलतापूर्वक अल्लाहको कार्य गर्न सकियोस् । यस आयतमा मुहाजिरहरूको विशेषताको वर्णन गरिएको छ । यो आयत सामान्य छ, जुन सबै मुहाजिरहरूलाई सम्मिलित गर्दछ तथा यो पनि संभव छ कि यो ती मुहाजिरहरूको विषयमा अवतरित भयो, जुन आफ्ना समुदायलाई कष्ट दिइएबाट पीडित भई इथोपिया स्थानान्तरित भएका थिए ।

مَا ظُلِمُوْا لَنُبَوِّئَنَّهُمْ فِي الدُّنْيَا حَسَنَةً ۖ وَلَأَجْرُ الْآخِرَةِ أَكْبَرُ ۚ لَوْ كَانُوْا يَعْلَمُوْنَ ﴿٤١﴾

हामीले उनीहरूलाई संसारमा सर्वश्रेष्ठ स्थान प्रदान गर्नेछौं,[1] तथा आख़िरतको प्रतिफल त निकै ठूलो छ,[2] काश ! मानिसहरू यसबाट परिचित भएको भए।

الَّذِيْنَ صَبَرُوْا وَعَلَىٰ رَبِّهِمْ يَتَوَكَّلُوْنَ ﴿٤٢﴾

(४२) यिनीहरू त्यसता मानिसहरू हुन् जसले धैर्यधारण गरे तथा आफ्नो प्रभुमाथि नै भरोसा गरिरहे।

وَمَا أَرْسَلْنَا مِنْ قَبْلِكَ إِلَّا رِجَالًا نُّوْحِيْ إِلَيْهِمْ ۚ فَاسْأَلُوْا أَهْلَ الذِّكْرِ إِنْ كُنْتُمْ لَا تَعْلَمُوْنَ ﴿٤٣﴾

(४३) तथा तपाईंभन्दा पहिला पनि हामीले मानव पुरूषलाई नै पठाउँदै गर्यौं जसतिर प्रकाशना (वह्यी) अवतरित गर्ने गर्दथ्यौं। यदि तिमी जान्दैनौं भने विद्वानहरूसित सोधिहाल।[3]

उनीहरूको संख्या स्त्रीहरूसहित एक सय अथवा त्यसभन्दा अधिक थियो, जसमा आदरणीय उस्मान ग़नी तथा उनकी पत्नी, रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमकी पुत्री रूकैय्या पनि थिए।

[1]यसबाट पवित्र जीविका एवं केही विद्वानहरूले "मदीना" तात्पर्य लिएका छन्, जुन मुसलमानहरूको केन्द्र बन्यो। इमाम इब्ने क़सीर भन्नुहुन्छ कि दुबै कथनहरूमा प्रतिकूलता छैन, यसकारण कि जुन मानिसहरूले आफ्नो व्यापार तथा घर छाडेर स्थानान्तरण (हिज़रत) गरेका थिए, अल्लाह तआलाले संसारमा नै उनको प्रतिफल प्रदान गर्यो। "पवित्र जीविका पनि दियो तथा सम्पूर्ण अरवमाथि उनीहरूलाई प्रभुत्व तथा अधिकार प्रदान गर्यो।

[2]आदरणीय उमर (رضي الله عنه) ले जब मुहाजिरहरू तथा अन्सारको भत्ता निर्धारित गर्नुभयो त प्रत्येक मुहाजिरलाई भत्ता दिने समयमा भन्नुभयो (هذا ما وعدك الله في الدنيا) "यो त्यो हो जसको अल्लाहले संसारमा वचन दिएको छ।" (وما أدخر لك في الآخرة أفضل) "तथा परलोकमा तिम्रो निम्ति जुन भण्डार छ, त्यो यसभन्दा कैयौं गुना श्रेष्ठ छ।" (इब्ने क़सीर)

[3](أهل الذكر) सित तात्पर्य अहले किताब हुन्, जुन अघिका नबीहरू तथा उनका इतिहाससित परिचित थिए। अर्थ यो हो कि हामीले जति पनि रसूलहरू पठायौं उनीहरू मनुष्य नै थिए, यसैले महम्मद सल्लल्लाहु अलैहि वसल्लम पनि यदि मनुष्य हुन् भने त यो कुनै नयाँ कुरा होइन कि तिमी उनको मनुष्यत्वका कारण उनको रिसालतलाई अस्वीकार गरिदेउ। यदि सन्देह छ भने तिमी अहले किताबसित सोध कि पूर्वकालिक सबै नबी मनुष्य थिए अथवा फरिश्ता, यदि उनीहरू फरिश्ता थिए त निःसन्देह अस्वीकार गरिदिनु, यदि उनी पनि सबै मनुष्य थिए भने महम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको रिसालतलाई मात्र मनुष्य हुनुको कारण इन्कार किन ?

بِالْبَيِّنٰتِ وَالزُّبُرِ ۗ وَاَنْزَلْنَآ اِلَيْكَ الذِّكْرَ لِتُبَيِّنَ لِلنَّاسِ مَا نُزِّلَ اِلَيْهِمْ وَلَعَلَّهُمْ يَتَفَكَّرُوْنَ ﴿٤٤﴾

(४४) निशानीहरू तथा किताबहरूका साथ, यो स्मृति (पुस्तक) हामीले तपाईंतिर उतारेका छौं ताकि मानिसहरूतिर जे उतारिएको छ तपाईंले त्यसलाई स्पष्टरूपले वर्णन गरिदिनुस् । शायद उनीहरूले सोच-विचार गरून् ।

اَفَاَمِنَ الَّذِيْنَ مَكَرُوا السَّيِّاٰتِ اَنْ يَّخْسِفَ اللّٰهُ بِهِمُ الْاَرْضَ اَوْ يَاْتِيَهُمُ الْعَذَابُ مِنْ حَيْثُ لَا يَشْعُرُوْنَ ﴿٤٥﴾

(४५) घिनलाग्दा छलकपट गर्नेहरू के यस कुराबाट निर्भय भइसकेका छन् कि अल्लाह (तआला) ले उनलाई धर्तीमा धसाइ दिन्छ अथवा उनको पासमा यस्तो स्थानबाट प्रकोप आइ पुग्छ जहाँको उनीहरूलाई अनुभूति पनि नहोस् ।

اَوْ يَاْخُذَهُمْ فِيْ تَقَلُّبِهِمْ فَمَا هُمْ بِمُعْجِزِيْنَ ﴿٤٦﴾

(४६)अथवा उनलाई हिंड्डुल गर्दा नै समातिहालोस्,[1] यिनीहरू कुनै प्रकारले पनि अल्लाह (तआला) लाई विवश गर्न सक्दैनन् ।

اَوْ يَاْخُذَهُمْ عَلٰى تَخَوُّفٍ ۗ فَاِنَّ رَبَّكُمْ لَرَءُوْفٌ رَّحِيْمٌ ﴿٤٧﴾

(४७) अथवा उनीहरूलाई डराई-धम्काई समातोस् ।[2] किन्तु निःसन्देह तिम्रो प्रभु अत्यन्त करूणाकारी तथा अत्यन्त कृपालु छ ।[3]

[1]यसका विभिन्न भावार्थ हुन सक्छन् । जस्तै (१)–जब तिमी व्यापार तथा व्यवसायको लागि यात्रामा जान्छौ । (२)–जब तिमी व्यवसायको उन्नतिको लागि विभिन्न साधन तथा रीति अपनाउँछौ । (३)–अथवा, रात्रिमा विश्राम गर्नको निम्ति ओछ्यानमा जान्छौं । यी (تقلب) का विभिन्न भावार्थ हुन् । अल्लाह तआला जब चाहन्छ यी अवस्थाहरूमा पनि तिम्रो पकड गर्नसक्दछ ।

[2](تخوف) को यो अर्थ पनि हुन सक्दछ कि पहिला देखि नै हृदयमा यातना तथा पकडको भय होस् । जुनप्रकार कैयन् पटक मनुष्य कुनै महापाप गर्दछ भने भयको आभास गर्दछ कि अल्लाहले मेरो पकड नगरिहालोस्, अतः कैयन् पटक यसप्रकार पनि पकड हुन्छ ।

[3]कि त्यो पापहरूमाथि तुरून्त पकड गर्दैन बरु अवसर प्रदान गर्दछ तथा त्यस अवसरले त अधिकतर मानिसहरूलाई क्षमा-याचना तथा विन्तीको सौभाग्य पनि प्राप्त हुनसक्छ ।

(४८) के उनीहरूले अल्लाहको सृष्टिमध्ये कुनैलाई पनि देखेनन् ? कि तिनको छायाँ दायाँ-बायाँ झुकि-झुकि अल्लाह (तआला) समक्ष दण्डवत (सजद:) गर्दछन् तथा विवशताको प्रदर्शन गर्दछन् ।[1]

أَوَلَمْ يَرَوْا إِلَىٰ مَا خَلَقَ اللَّهُ مِن شَيْءٍ يَتَفَيَّأُ ظِلَالُهُ عَنِ الْيَمِينِ وَالشَّمَائِلِ سُجَّدًا لِّلَّهِ وَهُمْ دَاخِرُونَ ﴿٤٨﴾

(४९) तथा निःसन्देह आकाशहरू तथा धर्तीका सबै जीवधारी तथा सबै फरिश्ताहरू अल्लाह (तआला) समक्ष दण्डवत (सजद:) गर्दछन् तथा अलिकति पनि गर्व गर्दैनन् ।

وَلِلَّهِ يَسْجُدُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ مِن دَابَّةٍ وَالْمَلَائِكَةُ وَهُمْ لَا يَسْتَكْبِرُونَ ﴿٤٩﴾

(५०) तथा आफ्ना प्रभुसित, जो उनीमाथि छ, भयभीत (कम्पित) रहन्छन्[2] तथा जो आदेश प्राप्त गर्दछन्, त्यसको पालना गर्नमा लागिरहन्छन् ।[3]

يَخَافُونَ رَبَّهُم مِّن فَوْقِهِمْ وَيَفْعَلُونَ مَا يُؤْمَرُونَ ﴿٥٠﴾

(५१) तथा अल्लाह (तआला) ले भनिसकेको छ कि दुईटा पूज्य न बनाउ । पूज्य त त्यही मात्र एक्लो छ ।[4] अत: तिमी सबै मसित मात्र तर्स ।

وَقَالَ اللَّهُ لَا تَتَّخِذُوا إِلَٰهَيْنِ اثْنَيْنِ ۖ إِنَّمَا هُوَ إِلَٰهٌ وَاحِدٌ ۖ فَإِيَّايَ فَارْهَبُونِ ﴿٥١﴾

[1]अल्लाह तआलाको महिमा तथा महानता एवं त्यसको गरिमाको महिमाको वर्णन छ कि प्रत्येक वस्तु त्यसको सामु दण्डवत् (सजदा) मा तथा अधीन छ, निर्जीव अथवा जीवधारी अथवा जिन्न एवं मनुष्य तथा फरिश्ताहरू प्रत्येक कुरो जसको छायाँ दायाँ-बायाँ झुक्दछ, त त्यो विहान साँझ, आफ्नो छायाँसहित अल्लाहलाई ढोग्दछ । इमाम मुजाहिद भन्नुहुन्छ कि जब सूर्य मध्यान तिर झुक्छ, न प्रत्येक कुरो अल्लाह सामू दण्डवत हुन्छ ।

[2]अल्लाहको भयले कम्पित तथा भयभीत रहन्छ ।

[3]अल्लाहका आदेशहरूको अवहेलना गर्दैनन्, बरु जे आदेश दिईन्छ, पालना गर्दछन्, जसबाट मनाही गरिन्छ, त्यसबाट टाढा रहन्छन् ।

[4]किनभने अल्लाहको अतिरिक्त कोही पूज्य छँदैछैन । यदि आकाश तथा धर्तीका दुई अथवा अन्य ईष्टदेव भएको भए संसारको यो सारा व्यवस्था स्थिर रहन सक्दैनथ्यो, विगाड तथा विनाशको निशाना भइसकेको हुन्थ्यो । ﴿لَوْ كَانَ فِيهِمَا آلِهَةٌ إِلَّا اللَّهُ لَفَسَدَتَا﴾ "यदि आकाश र पृथ्वीमा एक अल्लाहबाहेक अन्य ईश्वरहरु हुन्थे भने यो दुबै क्षतिग्रस्त हुने थिए ।" (सूर: अल-अम्बिया-२२) यसकारण (ثنويت) (दुई उपास्यहरू) को विश्वास जसलाई (अग्नि पूजक) मान्ने रहँदैआएका छन्

(५२) तथा आकाशहरूमा तथा धर्तीमा जे-जति छ, सबै उसैको हो तथा उसैको पूजा सधैं अनिवार्य छ,[1] के तैपनि तिमी त्यसको अतिरिक्त अरुहरूसित तर्सन्छौ ?

وَلَهُ مَا فِي السَّمٰوٰتِ وَالْأَرْضِ وَلَهُ الدِّينُ وَاصِبًا أَفَغَيْرَ اللّٰهِ تَتَّقُونَ ﴿٥٢﴾

(५३) तथा तिम्रो पासमा जति पनि सामग्री छन्, सबै उसैबाट प्रदान गरिएका हुन्,[2] अहिले पनि जब तिमीलाई कुनै कठिनाई आउँछ, त उसैतिर प्रार्थना तथा विन्ति गर्दैरह ।[3]

وَمَا بِكُمْ مِّنْ نِّعْمَةٍ فَمِنَ اللّٰهِ ثُمَّ إِذَا مَسَّكُمُ الضُّرُّ فَإِلَيْهِ تَجْـَٔرُونَ ﴿٥٣﴾

(५४) अनि जब उसले तिमीबाट कठिनाई हटाइदियो, त तिमीमध्ये केही मानिसहरू आफ्नो प्रभुको साथमा साझेदार बनाउन थाल्छन् ।

ثُمَّ إِذَا كَشَفَ الضُّرَّ عَنْكُمْ إِذَا فَرِيقٌ مِّنْكُمْ بِرَبِّهِمْ يُشْرِكُونَ ﴿٥٤﴾



अथवा (تعدد إله) (अनेकेश्वरवादी) को विश्वास, जसलाई अधिकतर मूर्तिपूजक मान्ने रहँदै आएका छन्, यी सब असत्य छन् । जब सृष्टिको स्रष्टा एक छ तथा त्यही बिना कसैको साझेदारी सृष्टिलाई व्यवस्थित गरिराखेको छ,त पूज्य पनि केवल त्यही छ, जो एक्लो छ, दुई अथवा दुईभन्दा अधिक छैन ।

[1]उसैको उपासना (इबादत) तथा आज्ञा-पालन स्थाई तथा अनिवार्य छ । (واصب) को अर्थ 'सदैव' हो । "उनका लागि यातना छ, सधैंका निम्ति ।" (सूर: अल-साफ़्फात-९) तथा यसको यही अर्थ हो जुन अन्य स्थानमा वर्णन गरिएको छ ।

﴿فَاعْبُدِ اللّٰهَ مُخْلِصًا لَّهُ الدِّينَ ☆ أَلَا لِلّٰهِ الدِّينُ الْخَالِصُ﴾

"तसर्थ अल्लाहको इबादत गर, उसैको लागि दीनलाई (धर्मलाई) विशेष गर्दै, सावधान ! उसैको लागि विशेषरुपले भक्ति छ ।" (सूर: अल-जुमर-२,३)

[2]जब सबै सुख-सुविधा अल्लाहले नै दिन्छ त त्यसपछि उपासना (इबादत) अरुहरूको किन ?

[3]यसको अर्थ यो हो कि अल्लाह एक हुनुको विश्वास हृदयका गहिराईमा स्थित छ, जो त्यसबेला सामू आउँछ, जब हरेकतिरबाट निराशाका बादल घना हुँदै जान्छन् ।

لِيَكْفُرُوا بِمَا آتَيْنَاهُمْ ۚ فَتَمَتَّعُوا ۖ فَسَوْفَ تَعْلَمُونَ ﴿٥٥﴾

(५५) कि हाम्रा प्रदान गरिएका अनुकम्पाहरूमाथि कृतघ्नता व्यक्त गरून्।[1] (ठीक छ) केही लाभ उठाइहाल। अन्तमा तिमीलाई ज्ञान भईनै हाल्नेछ।[2]

وَيَجْعَلُونَ لِمَا لَا يَعْلَمُونَ نَصِيبًا مِّمَّا رَزَقْنَاهُمْ ۗ تَاللَّهِ لَتُسْأَلُنَّ عَمَّا كُنتُمْ تَفْتَرُونَ ﴿٥٦﴾

(५६) तथा जसलाई जान्दै जान्दैनन्, त्यसको भाग हाम्रा प्रदान गरिएका वस्तुहरूमा निर्धारित गर्दछन्।[3] अल्लाहको सौगन्ध! तिम्रो यस आक्षेपको प्रश्न तिमीसित अवश्य नै गरिनेछ।[4]

---

[1]तर मानिस पनि कति कृतघ्न छ कि कष्ट (रोग, दरिद्रता तथा हानि आदि) समाप्त हुने बित्तिकै त्यसले पुनः प्रभुसँग शिर्क गर्न थाल्छ।

[2]यो त्यसैप्रकार नै छ, जस्तो यसभन्दा पूर्व भनेको थियो।

﴿قُلْ تَمَتَّعُوا فَإِنَّ مَصِيرَكُمْ إِلَى النَّارِ﴾

"क्षणिक जीवनमा लाभ उठाइहाल, अन्ततः तिम्रो वासस्थान नरक छ।" (सूरः इब्राहीम-३०)

[3]अर्थात् जसलाई यिनी हितकारक संकट समाधान गर्ने तथा पूज्य ठान्दछन्, तिनीहरू ढुङ्गाका मूर्ति हुन्, जसका वास्तविकता पनि कोही जान्दैन कि उनीसँग के घटित भइराखेको छ ? यी कुराहरूलाई कोही जान्दैन तर यी अत्याचारी मानिसहरूले उनको वास्तविकताबाट अनभिज्ञ हुँदाहुँदै पनि उनीहरूलाई अल्लाहका साझीदार बनाएका छन्। तथा अल्लाहद्वारा दिइएका मालमध्ये उनका लागि पनि (भोग-प्रसादको रुपमा) भाग निर्धारित गर्दछन्, बरु अल्लाहको भाग छैन भने कुनै चिन्ता छैन, उनीहरूको भागमा कमी गर्दैन, जस्तो कि सूरः अल-अनाम-१३६ मा वर्णन गरिएको छ।

[4]तिमी जुन अल्लाहमाथि मिथ्या आरोप लगाउँछौ कि उसका साझी अथवा उसका कैयन् साझेदारहरू छन्, उनका विषयमा क़ियामतका दिन तिमीसित सोधिनेछ।

وَيَجْعَلُوْنَ لِلّٰهِ الْبَنٰتِ سُبْحٰنَهٗ ۙ وَلَهُمْ مَّا يَشْتَهُوْنَ ۝

(५७) तथा उनीहरू पवित्र अल्लाह (तआ़ला) का लागि छोरीहरू निर्धारित गर्दछन् तथा आफ्ना लागि त्यो जुन आफ्ना इच्छा अनुसार हुन्छ ।[1]

وَاِذَا بُشِّرَ اَحَدُهُمْ بِالْاُنْثٰى ظَلَّ وَجْهُهٗ مُسْوَدًّا وَّهُوَ كَظِيْمٌ ۝

(५८) तथा उनीहरूमध्ये कसैलाई छोरी हुने सूचना दिईन्छ भने उसको अनुहारमा अन्धकार छाउँछ तथा मनमा दुखको आभास गर्दछ ।

يَتَوَارٰى مِنَ الْقَوْمِ مِنْ سُوْٓءِ مَا بُشِّرَ بِهٖ ؕ اَيُمْسِكُهٗ عَلٰى هُوْنٍ اَمْ يَدُسُّهٗ فِى التُّرَابِ ؕ اَلَا سَآءَ مَا يَحْكُمُوْنَ ۝

(५९) यस नराम्रो सूचनाको कारण मानिसहरूबाट लुकि-लुकि हिंड्छ । विचार गर्दछ कि के यस अपमानलाई बोकिराखोस् अथवा माटोमा गाडिदेओस् । ओह ! कस्तो नराम्रा निर्णय गर्दछन् ?[2]



[1]अरबका केही जनजाति (खुजाआ तथा किनाना) फरिश्ताहरूको पूजा गर्दथे तथा भन्थे कि यिनी अल्लाहका पुत्रीहरू हुन्, अर्थात् एउटा अत्याचार त यो गरे कि अल्लाहका सन्तान बनाए, जबकि उसका कुनै सन्तान छैन । अनि सन्तान पनि स्त्रीलिङ्ग, जसलाई उनीहरूले आफ्नो लागि अप्रिय ठान्थे, अल्लाहको लागि त्यो रूचाए । जस्तो कि अन्य स्थानमा अल्लाहको आदेश छ :

﴿اَلَكُمُ الذَّكَرُ وَلَهُ الْاُنْثٰى ۝ تِلْكَ اِذًا قِسْمَةٌ ضِيْزٰى﴾

"के तिम्रो लागि पुत्र तथा उसको लागि पुत्रीहरू ? यो त बडो भद्दा विभाजन हो ।" (सूरः अल-नज्म-२१, २२)

यहाँ यो भन्यो कि तिमी त यो कामना गर्दछौ कि पुत्र होस्, कुनै पुत्री नहोस् ।

[2]अर्थात् पुत्रीको जन्म सुनेर उनको यो दशा हुन्छ, जुन वर्णित भयो, तथा अल्लाहको लागि पुत्रीहरू चयन गर्दछन् । कस्तो अनुचित निर्णय छ ? यहाँ यो नबुझियोस् कि अल्लाह तआ़ला पनि छोराहरूको अपेक्षा छोरीहरूलाई तुच्छ ठान्दछ । होइन, अल्लाहका समक्ष छोराछोरीमा कुनै अन्तर छैन । न त लिङ्गको आधारमा कसैको हीनता तथा श्रेष्ठताको विचार उसकहाँ छ । यहाँ त मात्र अरबहरूको यस अन्याय तथा पूर्णरुपले अनुचित व्यवहारको स्पष्टीकरण उद्देश्य हो, जुन उनीहरूले अल्लाहसँग गरेका छन्, जबकि अल्लाहको महिमा तथा श्रेष्ठतालाई उनीहरूले पनि स्वीकार गर्दछन् । यसको तर्कपूर्ण परिणाम यो थियो कि जुन कुरो यिनी आफ्नो लागि प्रिय ठान्दैनथे, अल्लाहको लागि पनि त्यो निर्धारित गर्नु पर्दैनथ्यो, परन्तु उनीहरूले यसको विपरीत गरे । यहाँ केवल त्यसै अन्यायको स्पष्टीकरण गरिएको छ ।

(६०) परलोक (आख़िरत) मा ईमान नहुनेहरूकै नराम्रो उदाहरण छ,[1] अल्लाहको लागि त अति उच्च महिमा छ, त्यो बडो प्रभावशाली तथा विवेकी छ ।[2]

لِلَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ مَثَلُ السَّوْءِ ۖ وَلِلَّهِ الْمَثَلُ الْأَعْلَىٰ ۚ وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٦٠﴾

(६१) तथा यदि मानिसहरूको अत्याचारमा अल्लाहले उनको पकड गर्ने भए भने धर्तीमा एउटा पनि जीव बाँच्ने थिएन,[3] तर त्यसले त उनीहरूलाई एक निर्धारित समयसम्म छुट दिन्छ,[4] अनि जब उनको

وَلَوْ يُؤَاخِذُ اللَّهُ النَّاسَ بِظُلْمِهِم مَّا تَرَكَ عَلَيْهَا مِن دَابَّةٍ وَلَٰكِن يُؤَخِّرُهُمْ إِلَىٰ أَجَلٍ مُّسَمًّى ۖ فَإِذَا جَاءَ أَجَلُهُمْ

[1]अर्थात् काफ़िरहरूका जुन घोर कुकर्म वर्णन गरिएका छन्, उनैको लागि नराम्रो उदाहरण तथा दुर्गुण हो अर्थात् अज्ञान तथा कुफ्रको दुर्गुण । अथवा यो अर्थ हो कि अल्लाहको लागि पत्नी तथा सन्तान जुन यिनीहरू निर्धारित गर्दछन्, यो नराम्रो उदाहरण हो, जुन आख़िरतलाई नकार्नेवालाहरू अल्लाहको लागि वर्णन गर्दछन् ।

[2]अर्थात् त्यसको प्रत्येक गुण सृष्टिको तुलनामा श्रेष्ठतम् तथा महान छ । जस्तै त्यसको ज्ञान विस्तृत छ, त्यसको सामर्थ्य असीम छ, त्यसको दया तथा वरदान अनुपम छ । (وعلى هذا القياس) अथवा यो अर्थ हो कि त्यो सामर्थ्यवान् हो, स्रष्टा हो, जीविका प्रदान गर्ने हो तथा हेर्ने, सुन्ने हो आदि । (फ़तहुल क़दीर) अथवा नराम्रो उदाहरणको अर्थ कमी, आलस्य हो तथा (مثل أعلى) को अर्थ पूर्ण सामर्थ्य, प्रत्येकरुपले अल्लाहको लागि हो । (इब्ने क़सीर)

[3]यो उसको धैर्य हो तथा उसको विवेक एवं ज्ञानको परिणाम हो कि त्यो आफ्नो अवहेलना देख्दछ परन्तु तैपनि त्यो आफ्नो जीविका प्रदान गर्ने काम रोक्दैन तथा न तुरुन्तै पकड गर्दछ । यदि त्यसले कुकर्म गर्न साथ पकड गर्न प्रारम्भ गर्दछ भने अत्याचार, पाप तथा कुफ्र एवं शिर्क यति अधिक छन् कि धर्तीमा कुनै जीवधारी शेष रहँदैन, किनभने जब नराम्रो कुरा चारैतिर फैलिन्छ त प्रकोप पनि चारैतिर हुनेछ, जसले गर्दा सत्कर्मी पनि नाश गरिन्छन् । तर परलोकमा अल्लाहको तर्फबाट ती (सत्कर्मी) सम्मानित हुनेछन्, जस्तो कि हदीसमा स्पष्टीकरण छ । (हेर्नुस् सहीह बुख़ारी संख्या २११८ तथा मुस्लिम संख्या २२०६ तथा २२१०)

[4]यो त्यस विवेकको वर्णन हो जसको अधीन त्यो एक निर्धारित समयसम्म अवसर दिन्छ, ताकि उनको लागि कुनै तर्क शेष नरहोस्, दोस्रो उनका सन्तानहरूमध्ये केही ईमानदार निस्केर आऊन् ।

لَا يَسْتَأْخِرُوْنَ سَاعَةً وَّلَا يَسْتَقْدِمُوْنَ ﴿٦١﴾

त्यो समय आईपुग्छ, त उनीहरू एकछिन पछाडी रहन सक्दैनन् तथा न अगाडी बढ्न सक्छन् ।

وَيَجْعَلُوْنَ لِلّٰهِ مَا يَكْرَهُوْنَ وَتَصِفُ اَلْسِنَتُهُمُ الْكَذِبَ اَنَّ لَهُمُ الْحُسْنٰى ؕ لَا جَرَمَ اَنَّ لَهُمُ النَّارَ وَاَنَّهُمْ مُّفْرَطُوْنَ ﴿٦٢﴾

(६२) तथा उनीहरू आफ्ना लागि जुन कुरो अप्रिय ठान्दछन्, त्यसलाई अल्लाहको निम्ति सिद्ध गर्दछन् ।[1] तथा उनका जिभ्रा असत्य कुराहरूको वर्णन गर्दछन् कि उनको लागि श्रेष्ठता छ ।[2] कदापि होइन वास्तवमा उनको लागि अग्नि छ तथा यिनीहरू नरकवासीहरूका अग्रणी हुन् ।[3]

تَاللّٰهِ لَقَدْ اَرْسَلْنَاۤ اِلٰۤى اُمَمٍ مِّنْ قَبْلِكَ فَزَيَّنَ لَهُمُ الشَّيْطٰنُ اَعْمَالَهُمْ فَهُوَ وَلِيُّهُمُ الْيَوْمَ

(६३) अल्लाहको सौगन्ध ! हामीले तिमीभन्दा पूर्वका समुदायतिर पनि (आफ्ना रसूल) पठायौं तर शैतानले उनका कुकर्महरूलाई उनको दृष्टिमा उचित ठह्रायो,[4] त्यो शैतान आज पनि

[1]अर्थात् पुत्रीहरू, यो पुनरावृत्ति विशेष जोडको लागि छ ।

[2]यो उनको दोस्रो दुर्गुणको वर्णन हो कि अल्लाहसँग अन्यायको कुरा गर्दछन् । परन्तु उनका मुख झुटा कुरा बोल्दछन् कि उनको अन्त्य राम्रो छ, उनका लागि भलाईहरू छन् तथा संसारको जस्तै उनको आख़िरत पनि राम्रो हुनेछ । जबकि यस्तो होइन, न त यो सम्भव पनि छ ।

[3]अर्थात् निःसन्देह उनको अन्त राम्रो छैन तथा त्यो हो नरकको आगो, जसमा उनीहरूले नरकमा जानेहरूको नेतृत्व गर्नेछन् । (فرط) को यही अर्थ हदीसमा पनि सिद्ध छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : (أنا فرطكم على الحوض) (सहीह बुख़ारी संख्या ६५८४ तथा मुस्लिम संख्या १७९३) "म हौज़े कौसरमा तिम्रो नेतृत्व गर्नेछु ।" एउटा अर्को अर्थ مفرطون को यो गरिएको छ कि उनीहरूलाई नरकमा हालेर बिर्सिदिइने छ ।

[4]जसको कारण उनीहरूले पनि रसूलहरूलाई झुट्लाए जुनप्रकारले, हे पैग़म्बर, मक्काका कुरैशले तिमीलाई झुट्लाई राखेका छन् ।

وَلَهُمْ عَذَابٌ أَلِيمٌ ۝٦٣

उनको मित्र बनेको छ ।[1] तथा उनका लागि दुखदायी यातना छ ।

وَمَا أَنزَلْنَا عَلَيْكَ الْكِتَٰبَ إِلَّا لِتُبَيِّنَ لَهُمُ الَّذِي اخْتَلَفُوا فِيهِ ۙ وَهُدًى وَرَحْمَةً لِّقَوْمٍ يُؤْمِنُونَ ۝٦٤

(६४) यस किताबलाई हामीले तपाईंमाथि यसकारण अवतरित गरेका छौं कि तपाईंले हरेक त्यस कुरालाई व्यक्त गरिदिनुस् जसमा उनीहरू मतभेद गरिराखेका छन् ।[2] र यो निष्ठावानहरूको लागि मार्गदर्शन तथा कृपा हो ।

وَاللَّهُ أَنزَلَ مِنَ السَّمَاءِ مَاءً فَأَحْيَا بِهِ الْأَرْضَ بَعْدَ مَوْتِهَا ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَةً لِّقَوْمٍ يَسْمَعُونَ ۝٦٥

(६५) तथा अल्लाह (तआ़ला) ले आकाशहरूबाट वर्षा गरेर त्यसबाट धर्तीलाई त्यसको मृत्यु पश्चात जीवित गर्दछ। निःसन्देह यसमा उनीहरूका लागि निशानी छन्, जो सुन्दछन् ।

وَإِنَّ لَكُمْ فِي الْأَنْعَامِ لَعِبْرَةً ۖ نُّسْقِيكُم مِّمَّا فِي بُطُونِهِ مِن بَيْنِ فَرْثٍ وَدَمٍ لَّبَنًا خَالِصًا سَائِغًا لِّلشَّارِبِينَ ۝٦٦

(६६) तथा तिम्रा लागि त[3] पशुहरूमा पनि ठूलो शिक्षा छ कि हामीले तिमीलाई उनीहरूका पेटमा जे छ, त्यसैमा गोबर तथा रक्तको मध्येबाट शुद्ध दूध पिलाउँछौं, जुन पिउनेहरूलाई सजिलैसँग पच्दछ ।[4]

[1](اليوم) सित तात्पर्य सांसारिक समय हो, जस्तो कि अनुवादबाट स्पष्ट छ, यसबाट तात्पर्य आख़िरत हो कि त्यहाँ पनि यो उनको साथी हुनेछ। अथवा (وليهم) मा (هم) को संकेत मक्काका काफ़िरहरूतिर छ । अथवा यही शैतान जसले अघिका समुदायहरूलाई मार्ग-विचलित गऱ्यो, आज त्यो यी मक्काका काफ़िरहरूको मित्र छ तथा उनीहरूलाई रिसालत झुट्लाउनुको लागि बाध्य गरिराखेको छ ।

[2]यसमा नबी सल्लल्लाहु अलैहि वसल्लमको यो पदवी वर्णन गरिंदैछ कि आस्था तथा धार्मिक नियमहरूको सम्बन्धमा यहूदी तथा इसाईकामध्ये, त्यसैप्रकार अन्धविश्वासी तथा मूर्तिपूजकहरूका बीच तथा अन्य धर्महरूका अनुयायीहरूका बीच जुन आपसी मतभेद छ, तिनका विस्तृत वर्णन यसप्रकार गरून् कि सत्य तथा असत्य स्पष्ट होस् ताकि मानिसहरू सत्यलाई अपनाएर असत्यबाट बचन् ।

[3](أنعام) (चौपायाहरू, पशु) सित ऊँट, गाई, बाखा (तथा भेंडा एवं दुम्बा) तात्पर्य छ ।

[4]यी चौपायाहरू जे-जति खान्छन्, आमाशयमा जान्छ, त्यसै भोजनबाट दूध, रक्त, गोबर तथा मूत्र बन्दछ। रक्त नसाहरूमा तथा थनहरूमा, त्यसैप्रकार गोबर तथा मूत्र आ-आफ्ना

(६७) तथा खजूर एवं अंगुरका बोटहरूका फलबाट तिमीले मदिरा बनाउँछौ तथा उत्तम जीविका सामग्री पनि । जुन मानिसहरू बुद्धि भएका छन्, उनका लागि त यसमा पनि निकै ठूलो निशानी छ ।

وَمِن ثَمَرَٰتِ ٱلنَّخِيلِ وَٱلْأَعْنَٰبِ تَتَّخِذُونَ مِنْهُ سَكَرًا وَرِزْقًا حَسَنًا ۗ إِنَّ فِى ذَٰلِكَ لَءَايَةً لِّقَوْمٍ يَعْقِلُونَ ﴿٦٧﴾

(६८) तथा तपाईंको प्रभुले माहुरीलाई यो ज्ञान दियो ।[१] कि पर्वतहरूमा, वृक्षहरूमा तथा मानिसहरूद्वारा बनाइएका अग्ला-अग्ला घरहरूमा आफ्नो घर (चाका) बनाउ ।

وَأَوْحَىٰ رَبُّكَ إِلَى ٱلنَّحْلِ أَنِ ٱتَّخِذِى مِنَ ٱلْجِبَالِ بُيُوتًا وَمِنَ ٱلشَّجَرِ وَمِمَّا يَعْرِشُونَ ﴿٦٨﴾

(६९) तथा हरेक प्रकारको फल खाउ तथा आफ्नो (पालनकर्ता) का सरल मार्गहरूमा हिंड्ने गर, उनका पेटबाट (पिउने पदार्थ) पेयद्रव निस्कन्छ,[२] जसका रङ्ग भिन्न छन् ।[३] तथा जसमा मानिसहरूका लागि आरोग्य छ,[४]

ثُمَّ كُلِى مِن كُلِّ ٱلثَّمَرَٰتِ فَٱسْلُكِى سُبُلَ رَبِّكِ ذُلُلًا ۚ يَخْرُجُ مِنۢ بُطُونِهَا شَرَابٌ مُّخْتَلِفٌ أَلْوَٰنُهُۥ فِيهِ شِفَآءٌ

निकास स्थानबाट स्थान्तरित हुन्छ तथा दूधमा न त रक्तको रङ्ग हुन्छ तथा न गोबर एवं मुत्रको दुर्गन्ध । सेतो, स्वच्छ दूध बाहिर आउँछ, जो अत्यन्त सरलताले घाँटीबाट पेटमा जान्छ ।

[१]प्रकाशना (वह्यी) सित तात्पर्य त्यो बोध तथा त्यो सुझबुझ हो, जुन अल्लाह तआलाले आफ्नो स्वभाविक आवश्यकताको पूर्तिका लागि जीवहरूलाई प्रदान गरेको छ ।

[२]माहुरी प्रथम पर्वतमा, वृक्षमा तथा अग्ला भवनहरूमा आफ्नो घर यसप्रकार वनाउँछ कि त्यसमा कुनै छिद्र अथवा चिरा रहँदैन । अनि त्यो बगैंचा, वन, घाटी एवं पर्वतहरूमा घुमफिर गर्छ तथा हरेक प्रकारका फलहरूको रस आफ्नो पेटमा एकत्रित गर्दछ तथा त्यसपछि तिनै मार्गबाट जहाँबाट गुज्रन्छ, फर्कन्छ तथा आफ्नो घरमा आएर वस्छ, जहाँ त्यसको मुखबाट मधु निस्कन्छ, जसले कुरआनले पेयद्रव भनेको छ अर्थात् स्वास्थ्यवर्धक पेय पदार्थ ।

[३]कुनै रातो, कुनै सेतो, कुनै नीलो, कुनै बसन्ती रङ्गको । जुनप्रकार फल तथा खेतहरूबाट त्यो भोजन प्राप्त गर्दछ, त्यसैप्रकार त्यसको रङ्ग तथा स्वाद पनि भिन्न हुन्छ ।

[४]شِفَآءٌ जातिवाचक संज्ञा, महत्व दर्शाउनको लागि हो अर्थात धेरैजसो रोगहरूका लागि मधु स्वास्थ्यवर्धक छ । यो होइन कि प्रत्येक रोगको औषधि हो । वैध तथा चिकित्सकहरूले पनि महलाई स्वस्थ्यवर्धक प्राकृतिक द्रवको रूपमा मानेका छन् ।

لِّلنَّاسِ ۗ إِنَّ فِي ذَٰلِكَ لَآيَةً لِّقَوْمٍ يَتَفَكَّرُونَ ﴿٦٩﴾

चिन्तन तथा विचार गर्नेहरूका लागि यसमा पनि निकै ठूलो निशानी (लक्षण) छ ।

وَاللَّهُ خَلَقَكُمْ ثُمَّ يَتَوَفَّاكُمْ ۚ وَمِنكُم مَّن يُرَدُّ إِلَىٰ أَرْذَلِ الْعُمُرِ لِكَيْ لَا يَعْلَمَ بَعْدَ عِلْمٍ شَيْئًا ۚ إِنَّ اللَّهَ عَلِيمٌ قَدِيرٌ ﴿٧٠﴾

(७०) तथा अल्लाह (तआला) ले नै तिमी सबैलाई जन्म दिएको छ, त्यसैले फेरि तिमीलाई मृत्यु दिनेछ, तथा तिमीमध्ये यस्ता पनि छन् जो निकै नराम्रो आयुतिर फर्काइन्छन् कि धेरै जानिसके पश्चात पनि त्यो केही नजानोस् ।[1] निःसन्देह अल्लाह (तआला) सर्वज्ञाता सामर्थ्यवान छ ।

وَاللَّهُ فَضَّلَ بَعْضَكُمْ عَلَىٰ بَعْضٍ فِي الرِّزْقِ ۚ فَمَا الَّذِينَ فُضِّلُوا

(७१) तथा अल्लाह तआला ले नै तिमी मध्ये एक लाई अर्का माथि जीविकामा अधिक प्रदान गरेको छ । परन्तु जसलाई अधिक प्रधान

तर विशेष रोगहरूका लागि न कि प्रत्येक रोगको निम्ति हदीसमा वर्णित छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमलाई मिष्ठान एवं मधु (मह) रूचिकर थिए । (सहीह बुखारी किताबुल अशरिबः बाबु शराबिल हलवाए वल असले) एक अन्य कथनमा छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि तीन कुरामा स्वास्थ्य छ सिंघी (पोछ्ना) लगाइनुमा, मधु पिउनमा तथा आगोले दाग्नुमा । तर (सहीह बुखारी बाबुद दवाए बिल अस्ले) । हदीसमा एउटा घटनाको वर्णन पाईन्छ । पखाला (दस्त) को रोगमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले मधु प्रयोग गर्नुको सल्लाह लिनुभयो, जसबाट पखाला झन् बढिहाल्यो, आएर भनियो, त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले पुनः मधु पिउन सल्लाह दिनुभयो अझै अधिक उदरामय आउन थाल्यो तथा घरका मानिसहरूले ठाने कि सायद रोगमा वृद्धि भइसकेको छ । अनि नबी सल्लल्लाहु अलैहि वसल्लमको पासमा आए । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले तेस्रो पटक पनि भन्नुभयो अल्लाह साँचो छ तथा तिम्रो भाईको पेट झुटो छ । जाउ, तथा उसलाई मधु खुवाउ । अतः तेस्रो पटकमा त्यो पूर्ण स्वस्थ भयो । (सहीह बुखारी बाबु दवाइल मबतून तथा सहीह मुस्लिम किताबुस् सलाम)

[1]जब मनुष्य प्राकृतिक आयुभन्दा बढ्दछ तब त्यसपछि त्यसको बुद्धि पनि कमजोर हुदैजान्छ तथा कैयन् पटक बुद्धि समाप्त हुनजान्छ तथा त्यो बच्चा सरह हुनपुग्छ । यही बृद्धावस्था हो जसबांट नबी सल्लल्लाहु अलैहिं वसल्लमले शरण माँग्नु भएको छ ।

بِرَآدِّیْ رِزْقِهِمْ عَلٰی مَا مَلَکَتْ اَیْمَانُهُمْ فَهُمْ فِیْهِ سَوَآءٌ ؕ اَفَبِنِعْمَةِ اللّٰهِ یَجْحَدُوْنَ ﴿٧١﴾

गरिएको छ, उनी आफ्नो अधिक जीविकाबाट आफ्ना दासलाई दिदैन कि त्यो र यिनी त्यसमा समान भइहालून्,[1] त के यी मानिसहरू अल्लाहका उपकारहरूलाई अस्वीकार गरिराखेका छन् ?[2]

وَاللّٰهُ جَعَلَ لَکُمْ مِّنْ اَنْفُسِکُمْ اَزْوَاجًا وَّجَعَلَ لَکُمْ مِّنْ اَزْوَاجِکُمْ بَنِیْنَ وَحَفَدَةً وَّرَزَقَکُمْ مِّنَ الطَّیِّبٰتِ ؕ اَفَبِالْبَاطِلِ یُؤْمِنُوْنَ وَبِنِعْمَتِ اللّٰهِ هُمْ یَکْفُرُوْنَ ﴿٧٢﴾ ۙ

(७२) तथा अल्लाह (तआला) ले तिम्रो लागि तिमीहरू मध्येबाट नै तिम्रा पत्नीहरू पैदा गऱ्यो तथा तिम्रा पत्नीहरूबाट तिम्रा पुत्र तथा पौत्र पैदा गऱ्यो तथा तिमीलाई राम्रा-राम्रा कुराहरू खानलाई प्रदान गऱ्यो । त के तैपनि मानिसहरूले असत्यमाथि ईमान स्थपित गर्नेछन्[3] तथा अल्लाह तआलाका उपकारहरूको कृतघ्नता गर्नेछन् ?

وَیَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ مَا لَا یَمْلِکُ لَهُمْ رِزْقًا مِّنَ السَّمٰوٰتِ وَالْاَرْضِ شَیْـًٔا وَّلَا یَسْتَطِیْعُوْنَ ﴿٧٣﴾ ۚ

(७३) तथा उनीहरूले अल्लाह (तआला) का अतिरिक्त उनीहरूको पूजा गर्दछन्, जसले आकाशहरू तथा धर्तीबाट उनीहरूलाई केही पनि जीवन साधन दिन सक्दैन तथा न केही शक्ति राख्दछन् ।[4]



[1]अर्थात् जब तिमी आफ्ना दासहरूलाई यति धन तथा सांसारिक सुख साधन दिदैनौ कि उनी तिम्रो समान भईहालून् त अल्लाह तआलाले यो कसरी प्रिय ठान्नेछ कि तिमी केही मानिसहरूलाई, जो अल्लाहका भक्त तथा दास हुन्, अल्लाहको साझीदार तथा समान बनाउ ।

[2]कि अल्लाहद्वारा दिइएको धनबाट अन्य देवताहरूको भोग-प्रसाद निकाल्दछौ तथा यसप्रकार त्यसको अनुकम्पाको कृतघ्ना गर्दछौ ।

[3]अर्थात् अल्लाह तआला आफ्ना यी उपहारहरूको वर्णन गरेर जुन आयतमा वर्णित छन्, प्रश्न गरिराखेको छ कि सबैथोक दिने त अल्लाह नै हो, तर यिनीहरू त्यसलाई छाडेर अरुहरूको पूजा गर्दछन् तथा अन्यको भनाई मान्दछन् ।

[4]अर्थात् अल्लाहलाई छाडि पूजा पनि त्यस्ता मानिसहरूको गर्दछन्, जोसित कुनै कुराको अधिकार छैन ।

فَلَا تَضْرِبُوْا لِلّٰهِ الْاَمْثَالَ ؕ اِنَّ اللّٰهَ يَعْلَمُ وَ اَنْتُمْ لَا تَعْلَمُوْنَ ۝٧٤

(७४) तसर्थ अल्लाह (तआ़ला) का लागि समतुल्य न बनाउ,[1] अल्लाह (तआ़ला) राम्ररी जान्दछ तथा तिमी जान्दैनौ ।

ضَرَبَ اللّٰهُ مَثَلًا عَبْدًا مَّمْلُوْكًا لَّا يَقْدِرُ عَلٰى شَيْءٍ وَّمَنْ رَّزَقْنٰهُ مِنَّا رِزْقًا حَسَنًا فَهُوَ يُنْفِقُ مِنْهُ سِرًّا وَّجَهْرًا ؕ هَلْ يَسْتَوٗنَ ؕ اَلْحَمْدُ لِلّٰهِ ؕ بَلْ اَكْثَرُهُمْ لَا يَعْلَمُوْنَ ۝٧٥

(७५) अल्लाह (तआ़ला) एउटा उदाहरणको वर्णन गरिराखेको छ कि एउटा दास छ, अन्यको स्वामित्वको, जो कुनै कुराको अधिकार राख्दैन तथा एउटा अन्य व्यक्ति छ, जसलाई हामीले आफ्नो पासबाट समुचित धन दिएका छौं, जसबाट त्यो गोप्य तथा खुल्लारूपले खर्च गर्दछ । के यी सबै समान हुन सक्दछन् ?[2] अल्लाह (तआ़ला)



[1]जुन प्रकारले मुशिरकहरू उदाहरण दिन्छन् कि जस्तो राजालाई भेट्नु छ अथवा त्यसबाट कुनै काम छ भने कोही सोझै राजासित सम्पर्क स्थापित गर्न सक्दैन, उसले सर्वप्रथम राजाका निकटवर्तीसित सम्बन्ध स्थापित गर्नुपर्छ, अनि वल्ल उसको राजासित सम्पर्क हुन्छ । त्यसैप्रकार अल्लाहको मान तथा महिमा अपरम्पार छ । त्यससम्म पुग्नका लागि हामीले यी देवताहरूलाई साधन वनाउँछौं अथवा महात्माको माध्यम समात्छौं । अल्लाह (तआ़ला) ले भन्यो कि तिमी अल्लाहलाई आफूजस्तो नठान न यस किसिमको उदाहरण देउ, यसकारण कि त्यो त एक्लो छ, जसको कुनै उपमा नै छैन । अनि राजा न त लुकेका कुराहरू जान्दछ, न अन्तर्यामी न सबैकुरा देख्ने र सुन्ने हुन्छ कि बिना कुनै साधन जनताको दशा तथा आवश्यकताहरूलाई जान्न सकोस् । जबकि अल्लाह तआ़ला प्रत्यक्ष अप्रत्यक्ष स्पष्ट-अस्पष्ट, दर्शी-अदर्शी हरप्रकारको कुराको ज्ञान राख्दछ तथा प्रत्येकको विन्ती सुन्ने सामर्थ्य राख्दछ । तसर्थ एउटा मनुष्य राजाको अल्लाहसँग के तुलना तथा उदाहरण ?

[2]केही विद्वानहरू भन्दछन् कि यो दास तथा स्वतन्त्रको उदाहरण हो कि प्रथम व्यक्ति दास तथा द्वितीय स्वतन्त्र छ । यी दुबै समान हुन सक्दैनन् । केही ज्ञाताहरूको भनाई छ कि यो ईमानवालाहरू तथा काफ़िरहरूको तुलना हो । प्रथम काफ़िर तथा द्वितीय ईमानवाला हो । यी समान छैनन् । केही विद्वानहरू भन्छन् कि यो अल्लाह तआ़ला तथा झूटा देवताहरूको तुलना हो । प्रथमसित तात्पर्य झूटा देवता तथा द्वितीयसित अल्लाह हो । यी दुबै समान सक्दैनन् । अर्थ यही हो कि यो एक दास तथा स्वतन्त्र, यसका उपरान्त यी दुबै मनुष्य हुन्, दुबै अल्लाहको सृष्टि हुन् तथा अन्य पनि धेरैजसो कुरा दुबै बीच समान छन् । यसको उपरान्त मान, सम्मान, मर्यादा तथा आदरमा दुबैलाई समान ठान्दैनन् । तसर्थ

के लागि सारा प्रशंसा हुन्, तर उनीहरूमध्ये अधिकतर मानिसहरू जान्दैनन् ।

(७६) तथा अल्लाह (तआला) ले एउटा अर्को उदाहरण वर्णन गर्दछ[1] दुईटा व्यक्ति छन्, जसमध्ये एउटा लाटो छ तथा कुनै कुरामाथि उसलाई अधिकार प्राप्त छैन, बरु त्यो आफ्नो स्वामीमाथि एउटा बोझ छ, त्यसलाई उसले जहाँ पठाउँछ, केही राम्रो गरेर ल्याउँदैन । के यो तथा त्यो जो न्यायको आदेश दिन्छ र स्वयं पनि सोझो मार्गमा छ, समान हुन सक्दछन् ?

وَضَرَبَ اللّٰهُ مَثَلًا رَّجُلَيۡنِ اَحَدُهُمَاۤ اَبۡكَمُ لَا يَقۡدِرُ عَلٰى شَىۡءٍ وَّهُوَ كَلٌّ عَلٰى مَوۡلٰٮهُ ۙ اَيۡنَمَا يُوَجِّههُّ لَا يَاۡتِ بِخَيۡرٍ ؕ هَلۡ يَسۡتَوِىۡ هُوَ ۙ وَمَنۡ يَّاۡمُرُ بِالۡعَدۡلِ ۙ وَهُوَ عَلٰى صِرَاطٍ مُّسۡتَقِيۡمٍ ﴿۷۶﴾

(७७) तथा आकाशहरू र धर्तीका परोक्षका कुरा मात्र अल्लाहलाई नै ज्ञात छ ।[3] र त्यस क़ेयामतको कुरा त मात्र यस्तो छ, जस्तै आँखा झिम्म गर्नु बरु त्यसभन्दा पनि धेरै निकट । निःसन्देह

وَلِلّٰهِ غَيۡبُ السَّمٰوٰتِ وَالۡاَرۡضِ ؕ وَمَاۤ اَمۡرُ السَّاعَةِ اِلَّا كَلَمۡحِ الۡبَصَرِ اَوۡ هُوَ اَقۡرَبُ ؕ اِنَّ اللّٰهَ عَلٰى كُلِّ

अल्लाह तआला तथा ढुङ्गाको एउटा मूर्ति अथवा एउटा चिहानको थुप्रो, यी दुबै कुन प्रकार समान हुन सक्दछन् ?

[1]यो एउटा अन्य उदाहरण हो, जुन पहिलोभन्दा धेरै स्पष्ट छ ।

[2]तथा प्रत्येक कार्य गर्नुको सामर्थ्य राख्दछ किनभने हरेक कुरो बोल्दछ, बुझ्दछ तथा छ पनि सोझो मार्गमा अर्थात् प्राकृतिक धर्म तथा सुचरित्रमा । अर्थात् अधिकता एवं कमीवाट पवित्र । जसरी यी दुबै समान छैनन्, त्यसरी नै अल्लाह तआला तथा ती वस्तुहरू जसलाई मानिसहरू अल्लाहको साझीदार ठहराउँछन्, समान हुनै सक्दैनन् ।

[3]अर्थात् आकाश तथा धर्तीमा जुन कुराहरू अप्रत्यक्ष छन् तथा उनी असंख्य छन् एवं तिनैमा क़ेयामतको ज्ञान छ, ती सबैको ज्ञान अल्लाहका अतिरिक्त कसैलाई छैन । यसकारण इबादत (उपासना) को योग्य एक अल्लाह नै छ न कि ती मूर्तिहरू अथवा मृत धर्मात्मा व्यक्तिहरू जसलाई कुनै वस्तुको ज्ञान छैन, न उनी कसैलाई लाभ-हानि पुऱ्याउन सामर्थ्य राख्दछन् ।

شَيْءٍ قَدِيرٌ ۝

अल्लाह (तआ़ला) हरेक कुरोमाथि सामर्थ्यवान छ ।[1]

وَاللَّهُ أَخْرَجَكُم مِّنۢ بُطُونِ أُمَّهَٰتِكُمْ لَا تَعْلَمُونَ شَيْـًٔا وَجَعَلَ لَكُمُ السَّمْعَ وَالْأَبْصَٰرَ وَالْأَفْـِٔدَةَ لَعَلَّكُمْ تَشْكُرُونَ ۝

(७८) तथा अल्लाह (तआ़ला) ले तिमीलाई तिम्रा आमाहरूको गर्भबाट त्यस दशामा निकालेको छ जब कि तिमी केही पनि जान्दैनथ्यौ,[2] उसैले तिम्रा कान तथा आँखा एवं हृदय बनायो[3] ताकि तिमी कृतज्ञता व्यक्त गर्न सक ।[4]

[1]अर्थात् उसको सामर्थ्यको प्रमाण हो कि यो विस्तृत विशाल सृष्टि त्यसको आदेशबाट आँखा झिम्म गर्दाको समय बरु त्यसभन्दा पनि कम समयमा प्रलय तथा समाप्त भइहाल्नेछ । यो कुरो अतिश्योक्तिको रूपमा होइन बरु यो एउटा वास्तविक घटना हो किनभने त्यसको सामर्थ्य असीम छ, जसको हामी अनुमान पनि गर्न सक्दैनौं, त्यसको एक शब्द कुन (كُن) बाट त्यो सबै हुन्छ जुन त्यो चाहन्छ । तसर्थ यो कयामत पनि त्यसको (كُن) कुन शब्द भन्नासाथ भइहाल्नेछ ।

[2](شَيْـًٔا) जातिवाचक हो, तिमी केही पनि जान्दैनथ्यौ, न शुभ-अशुभलाई, न लाभ हानिलाई ।

[3]ताकि कानहरूद्वारा तिमी स्वर सुन, आँखाहरूद्वारा वस्तुहरूलाई हेर तथा हृदय अर्थात बुद्धि (किनभने बुद्धिको केन्द्र हृदय हो), दियो, जसबाट विभिन्न वस्तुहरू बीच अन्तर गर्न सक तथा लाभ-हानि जान्न सक, जस्तो-जस्तो मानिस ठूलो हुँदै जान्छ, त्यसको शक्ति तथा बुद्धिमा बृद्धि हुँदैजान्छ यहाँसम्मकि जब मानिस समझ तथा वयस्क आयुमा पुग्दछ, त त्यसको क्षमता पनि शक्तिशाली हुँदैजान्छ, यहाँसम्मकि पछि पूर्णतःको सीमासम्म पुग्दछ ।

[4]अर्थात् यो क्षमता तथा शक्ति अल्लाह तआ़लाले यसकारण प्रदान गरेको छ कि मानिसले यी अङ्ग-प्रत्यङ्गहरूलाई यसप्रकार प्रयोग गरोस् कि जसबाट अल्लाह प्रसन्न होस्, तिनीबाट अल्लाहको इबादत तथा आज्ञापालन गरोस् । यही अल्लाहका ती उपहारहरूको व्यवहारिक कृतज्ञता हो । हदसिमा वर्णित छ, मेरो भक्त जुन कुराहरूद्वारा मेरो निकटता प्राप्त गर्दछ, तीमध्ये सबभन्दा अधिक प्रिय कुरा ती हुन्, जुन मैले उसको लागि अनिवार्य गरेको छु । यसका अतिरिक्त ऐच्छिक इबादतद्वारा पनि त्यसले मेरो अधिक निकटता प्राप्त गर्न प्रयत्न गर्दछ । यहाँसम्मकि म त्यसँग प्रेम गर्न थाल्छु । तथा जब म त्यसलाई प्रेम गर्न थाल्छु त म त्यसको कान भइदिन्छु जसबाट त्यो सुन्दछ, आँखा भइदिन्छु जसबाट त्यो हेर्दछ, हात भइदिन्छु जसबाट त्यो समात्छ, खुट्टा भईदिन्छ, जसबाट त्यो हिंड्दछ तथा यदि मसित माँग्दछ भने म त्यसलाई प्रदान गर्दछु ।

(७९) के उनीहरूले पंक्षीहरूलाई आकाशमण्डलमा वशीभूत देखेनन्, जसलाई अल्लाहका अतिरिक्त अन्य कोही थामेको छैन ।[1] निःसन्देह यसमा ईमान भएकाहरूका लागि धेरै लक्षणहरू (निशानी) छन् ।

أَلَمْ يَرَوْا إِلَى الطَّيْرِ مُسَخَّرَاتٍ فِي جَوِّ السَّمَاءِ مَا يُمْسِكُهُنَّ إِلَّا اللَّهُ ۗ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِقَوْمٍ يُؤْمِنُونَ ﴿٧٩﴾

(८०) तथा अल्लाह (तआला) ले तिम्रो निम्ति तिम्रा घरहरूमा बस्ने ठाउँ बनाएको छ । र उसैले तिम्रो निम्ति पशुहरूका छालाबाट पनि घर बनाइदिएको छ, जसलाई तिमीले आफ्नो यात्राको दिन र बासको दिन पनि हलुङ्गो पाउँछौ,[2] तथा उनका ऊन, भुत्ला तथा कपालहरूबाट पनि उसले धेरै वस्तुहरू तथा एउटा निर्धारित समयसम्मको लागि विभिन्न लाभकारी वस्तुहरू बनायो ।[3]

وَاللَّهُ جَعَلَ لَكُمْ مِنْ بُيُوتِكُمْ سَكَنًا وَجَعَلَ لَكُمْ مِنْ جُلُودِ الْأَنْعَامِ بُيُوتًا تَسْتَخِفُّونَهَا يَوْمَ ظَعْنِكُمْ وَيَوْمَ إِقَامَتِكُمْ ۙ وَمِنْ أَصْوَافِهَا وَأَوْبَارِهَا وَأَشْعَارِهَا أَثَاثًا وَمَتَاعًا إِلَىٰ حِينٍ ﴿٨٠﴾

तथा मसित कुनै वस्तुबाट मुक्ति चाहन्छ त म त्यसलाई शरण दिन्छु (सहीह बुखारी किताबुर रिकाक् बाबुत्तवाजुअ) यस हदीसको गलत अर्थ लगाएर केही मानिस महात्माहरूलाई अल्लाहको शक्तिधारणकर्ता बनाएका छन् , यद्यपि हदीसको स्पष्ट अर्थ यो हो कि जब भक्त आफ्नो इबादत तथा आज्ञा पालनलाई शुद्धरूपले अल्लाहकै निम्ति गर्दछ, त त्यसको प्रत्येक कार्य अल्लाहकै प्रसन्नताको लागि हुन्छ, त्यसको कानहरूले त्यही कुरो सुन्दछन् तथा आँखाले त्यही कुरो देख्दछन्, जसको अल्लाहले आज्ञा प्रदान गरेको छ, जुन कुरोलाई हातले समात्छ तथा खुट्टाले हिंडेर त्यसतर्फ जान्छ, त त्यो त्यही वस्तु हुन्छ, जसलाई धार्मिक नियमहरूले मान्यता दिएका हुन्छन् । त्यसले उनलाई अल्लाहको अवज्ञाको लागि प्रयोग गर्दैन । मात्र आज्ञा-पालनमा प्रयोग गर्दछ ।

[1]यो अल्लाह तआला नै हो जसले पंक्षीहरूलाई यसप्रकार उड्नुको तथा हवाहरूलाई आफूमाथि उचालिराख्नुको शक्ति प्रदान गरेको छ ।

[2]छालाद्वारा निर्मित पालहरू जसलाई तिमी यात्राहरूमा सजिलैसँग बोकेर हिंड्छौ, तथा जहाँ आवश्यक पर्दछ, पाल स्थापित गरेर ऋतुको तीव्रताबाट आफूलाई सुरक्षित गर्दछौ ।

[3](أصواف) बहुवचन हो (صوفٌ) को । (भेडाको ऊन) । (أوبارٌ) बहुवचन हो (وبرٌ) को, ऊँटको रौहरू, (أشعار) बहुवचन हो (شَعْرٌ) को, भेंडा तथा बाखाका भुत्ला । यिनीबाट थरी-थरीका सामग्रीहरु बन्दछन्, जसबाट मानिसलाई धन अर्जित हुन्छ ।

وَاللّٰهُ جَعَلَ لَكُمْ مِّمَّا خَلَقَ ظِلٰلًا وَّجَعَلَ لَكُمْ مِّنَ الْجِبَالِ اَكْنَانًا وَّجَعَلَ لَكُمْ سَرَابِيْلَ تَقِيْكُمُ الْحَرَّ وَسَرَابِيْلَ تَقِيْكُمْ بَاْسَكُمْ ۭ كَذٰلِكَ يُتِمُّ نِعْمَتَهٗ عَلَيْكُمْ لَعَلَّكُمْ تُسْلِمُوْنَ ⑧١

(८१) तथा अल्लाहले नै तिम्रो लागि आफूद्वारा पैदा गरिएका कुराहरूबाट छायाँको प्रबन्ध गरेको छ।[1] तथा उसैले तिम्रा निम्ति पर्वतहरूमा गुफा बनाएको छ तथा उसैले तिम्रो लागि वस्त्र बनाएको छ, जुन तिमीलाई गर्मीबाट सुरक्षित राख्दछन्, यस्ता कवच (वस्त्र) पनि जुन तिमीलाई युद्धका समय काम आउँछन्।[2] त्यसले यसैप्रकार आफ्नो पूरा उपहार प्रदान गरिराखेको छ ताकि तिमी आज्ञा पालक बन।

فَاِنْ تَوَلَّوْا فَاِنَّمَا عَلَيْكَ الْبَلٰغُ الْمُبِيْنُ ⑧٢

(८२) तैपनि यदि उनीहरू विमुख रहन्छन्, भने तपाईंको जिम्मेवारी केवल स्पष्टरूपले पुऱ्याइदिनु हो।

يَعْرِفُوْنَ نِعْمَتَ اللّٰهِ ثُمَّ يُنْكِرُوْنَهَا وَاَكْثَرُهُمُ الْكٰفِرُوْنَ ⑧٣

(८३) यिनीहरू अल्लाहको उपहार जान्दछन्, बुझ्दछन्, तैपनि तिनीहरूलाई नकारिराखेका छन्, बरु उनीहरूमा अधिकतर त कृतघ्न छन्।[3]

وَيَوْمَ نَبْعَثُ مِنْ كُلِّ اُمَّةٍ شَهِيْدًا ثُمَّ لَا يُؤْذَنُ لِلَّذِيْنَ كَفَرُوْا وَلَا هُمْ

(८४) तथा जुन दिन हामीले प्रत्येक समुदायवाट साक्षी उभ्याउनेछौं,त काफ़िरहरूलाई त्यसपछि न त

तथा उनीवाट एक समयसम्मं लाभ पनि उठाईन्छ।

[1]अर्थात् वृक्ष जसवाट छायाँ प्राप्त गर्दछौ।

[2]अर्थात् ऊन तथा कपासका कुर्ता, कमिज तथा अन्य वस्त्र जो सामान्यत: लगाउनका लागि प्रयोग हुन्छन् तथा फलामको कवच तथा मुकुट जुन युद्धमा लगाइन्छ।

[3]अर्थात् यस कुरालाई जान्दछन् तथा बुझ्दछन् कि यी सारा सुख सुविधाहरू उत्पन्न गर्ने तथा उनलाई प्रयोगमा ल्याउन क्षमता प्रदान गर्ने केवल अल्लाह तआला नै हो, तैपनि अल्लाहलाई मान्दैनन् तथा अधिकतर कृतघ्न हुन्छन्। अर्थात् अल्लाहलाई छाडि अरुहरूको पूजा गर्दछन्।

يُسْتَعْتَبُونَ ۝٨٤

आज्ञा दिइनेछ तथा न क्षमा-याचना गर्न भनिनेछ ।[1]

وَإِذَا رَأَى الَّذِينَ ظَلَمُوا الْعَذَابَ فَلَا يُخَفَّفُ عَنْهُمْ وَلَا هُمْ يُنظَرُونَ ۝٨٥

(८५) तथा जब यी अत्याचारी मानिसहरूले यातना देखिसकेका हुन्छन्, त्यस पश्चात त्यो न त उनको लागि हलुका गरिनेछ तथा न उनलाई मोहलत (समय) नै दिइनेछ ।[2]

وَإِذَا رَأَى الَّذِينَ أَشْرَكُوا شُرَكَاءَهُمْ قَالُوا رَبَّنَا هَٰؤُلَاءِ شُرَكَاؤُنَا الَّذِينَ كُنَّا نَدْعُوا مِن دُونِكَ ۖ فَأَلْقَوْا إِلَيْهِمُ الْقَوْلَ إِنَّكُمْ لَكَاذِبُونَ ۝٨٦

(८६) तथा मिश्रणवादी जब आफ्ना भागीदारहरूलाई देखिसकेका हुनेछन्, त भन्नेछन् कि हे हाम्रो प्रभु ! यी नै हाम्रा साझेदार हुन्, जसलाई हामीले तिमीलाई छोडेर पुकार्ने गर्दथ्यौं । अनि तिनीहरूले उनलाई उत्तर दिनेछन् कि तिमीहरू बिल्कुल झुटा हौ ।[3]

[1]अर्थात प्रत्येक अनुयायीहरूका गुटमाथि त्यस अनुयायी समूहको पैग़म्बर साक्षी हुनेछ कि उनीहरूलाई अल्लाहको सन्देश पुऱ्याइएको थियो, परन्तु उनीहरूले त्यसको चिन्ता गरेनन् । यी काफ़िरहरूलाई कारण भन्नको लागि समय पनि दिइने छैन, किनभने वास्तवमा उनीहरूसित कुनै कारण अथवा तर्क हुने नै छैन, न उनीसित फर्कने तथा यातना हटाउनको माँग गरिनेछ, किनभने यसको आवश्यकता त्यस समय आउँछ जब कसैलाई अवसर दिनुको विकल्प हुन्छ । (لا يُستعتبون) को एउटा अन्य अर्थ यो गरिएको छ कि उनीहरूलाई आफ्नो प्रभुलाई प्रसन्न पार्नुको अवसर दिइने छैन किनभने त्यो समय उनलाई संसारमा दिइसकिएको छ, जुन कर्मशाला हो । परलोक त कर्मशाला होइन, त्यो त प्रतिकारको घर हो त्यहाँ त त्यस कुराको प्रतिफल प्राप्त हुनेछ, जुन मनुष्यले संसारमा गरेको हुनेछ, त्यहाँ केही गर्नुको अवसर कसैलाई दिइने छैन ।

[2]हलुको नगर्नुको अर्थ, मध्यमा कुनै विराम हुनेछैन, यातना निरन्तर बिना कुनै विलम्ब हुनेछ । तथा न छुट नै दिइनेछ अर्थात उनलाई तुरुन्त बलियो तरिकाले समातिनेछ तथा जंजीरहरूबाट जकडिएर नरकमा फ्याँकिदिइनेछ अथवा क्षमा माँग्ने अवसर पनि प्रदान गरिने छैन, किनभने परलोक कर्मस्थली होइन । प्रतिफल प्राप्त गर्ने स्थान हो ।

[3]झुटा देवताहरूको पूजा गर्नेहरू आफ्ना दावीमा त झूठा हुने छैनन् तर ती देवी-देवता जसलाई यिनीहरू अल्लाहको साझीदार भन्दछन्, भन्नेछन् कि यिनीहरू झूटा हुन् । यो या त साझीदारीलाई नकार्नु हो अर्थात् हामीलाई अल्लाह तआलाको साझेदार बनाउनमा यिनी झूटा हुन्, अल्लाहको साझीदार को हुनसक्छ र ? अथवा यसकारण उनीहरूलाई झूटा भन्नेछन् कि

وَاَلْقَوْا اِلَى اللّٰهِ يَوْمَىِٕذِ ۨالسَّلَمَ وَضَلَّ عَنْهُمْ مَّا كَانُوْا يَفْتَرُوْنَ ۝٨٧

(८७) तथा त्यसदिन उनीहरू सबै (विवश) भएर अल्लाहका सामु आज्ञाकारी हुनु स्वीकार गर्नेछन् तथा जुन आक्षेप गर्दथे, त्यो सबै उनीबाट हराइसकेका हुनेछन् ।

اَلَّذِيْنَ كَفَرُوْا وَصَدُّوْا عَنْ سَبِيْلِ اللّٰهِ زِدْنٰهُمْ عَذَابًا فَوْقَ الْعَذَابِ بِمَا كَانُوْا يُفْسِدُوْنَ ۝٨٨

(८८) जसले अधर्म (कुफ्र) गरे तथा अल्लाहको मार्गबाट रोके, हामीले उनीहरूको लागि प्रकोपमाथि-प्रकोप बढाउँदै जानेछौं,[1] यो प्रतिकार हुनेछ उनीबाट उपद्रव उत्पन्न गर्नुको ।

---

उनी तिनका पूजाबाट कदापि अनभिज्ञ थिए । जसरी कुर्आन करीमले विभिन्न स्थानहरूमा यस कुराको वर्णन गरेको छ ।

﴿فَكَفٰى بِاللّٰهِ شَهِيْدًا بَيْنَنَا وَبَيْنَكُمْ اِنْ كُنَّا عَنْ عِبَادَتِكُمْ لَغٰفِلِيْنَ﴾

"हाम्रो तथा तिम्रो मध्य अल्लाह नै पर्याप्त साक्षी छ कि हामी यस कुराबाट अनभिज्ञ थियौं कि तिमी हाम्रो पूजा गर्दथ्यौ ।" (सूर: यूनुस-२९)

अन्य ठाउँमा पनि हेर्नुस् सूर: अल-अहक़ाफ़ आयत ५ तथा ६, सूर: मरियम-८१ तथा ८२, सूर: अल-अनकबूत-२५,सूर: अल-कहफ़-५२ आदि । एउटा यो अर्थ पनि हुनसक्छ कि हामीले तिमीलाई आफ्नो पूजा गर्न भनेका थिएनौं, यसकारण तिमी नै झुटा हौ । यी देवी-देवता यदि ढुङ्गा तथा बृक्ष हुनेछन् भने अल्लाह तआलाले उनीहरूलाई बोल्ने शक्ति प्रदान गर्नेछ, जिन्नात तथा शैतान हुनेछन् भने कुनै शंका नै छैन तथा यदि अल्लाहका पुण्य आत्मा व्यक्ति हुनेछन्, जसरी मानिसहरू पुण्य आत्मा व्यक्तिहरू, महात्मा एवं अल्लाहको निकटता प्राप्त मानिसहरूलाई पुकार्दछन्, उनका नामको भोग तथा प्रसाद चढाउँछन् तथा उनका चिहान समाधिमा गई उनको त्यसैप्रकार सम्मान गर्दछन्, जुन प्रकारले ईष्टदेवको, भय तथा आशाको भावले गरिन्छ । त अल्लाह तआलाले उनलाई हश्रको मैदानमा मुक्ति प्रदान गर्नेछैन तथा उनका पूजा गर्नेहरूलाई नरकमा हालिदिनेछ । जस्तो कि आदरणीय ईसासित अल्लाह तआलाको प्रश्न तथा उनको उत्तर सूर: मायद:को अन्तमा वर्णित छ ।

[1]जसरी स्वर्गमा ईमानवालाहरूका विभिन्न पद हुनेछन्, त्यसरी नै नरक़मा काफ़िरहरूको यातनामा भिन्नता हुनेछ । जो विचलित हुनुका साथ अन्य मानिसहरूलाई विचलित गराउनुको कारण बनेका हुन्छन्, उनीहरूको यातना अरुहरूको अपेक्षा तीव्र हुनेछ ।

(८९) तथा (स्मरण गर) जुन दिन हामीले प्रत्येक समुदायमा उनैमध्ये उनीमाथि साक्षी उभ्याउने छौं तथा तिमीलाई ती सबैमाथि साक्षी बनाएर ल्याउने छौं ।[1] तथा हामीले तिमीमाथि यो किताब अवतरित गरेका छौं जसमा हरेक कुराको स्वच्छ वर्णन छ[2] तथा मुसलमानहरूका लागि मार्ग-दर्शन तथा कृपा एवं शुभ-सूचना हो ।

وَيَوْمَ نَبْعَثُ فِي كُلِّ أُمَّةٍ شَهِيدًا عَلَيْهِم مِّنْ أَنفُسِهِمْ وَجِئْنَا بِكَ شَهِيدًا عَلَىٰ هَٰؤُلَاءِ وَنَزَّلْنَا عَلَيْكَ الْكِتَابَ تِبْيَانًا لِّكُلِّ شَيْءٍ وَهُدًى وَرَحْمَةً وَبُشْرَىٰ لِلْمُسْلِمِينَ ﴿٨٩﴾

(९०) नि:सन्देह अल्लाह (तआला) न्यायको, भलाईको तथा निकट सम्बन्धिहरूका साथ सद्व्यवहार गर्नुको आदेश दिन्छ तथा निर्लज्जताका कार्य तथा दुराचारहरू एवं अत्याचार र क्रुरताबाट रोक्दछ ।[3] त्यसले

إِنَّ اللَّهَ يَأْمُرُ بِالْعَدْلِ وَالْإِحْسَانِ وَإِيتَاءِ ذِي الْقُرْبَىٰ وَيَنْهَىٰ عَنِ الْفَحْشَاءِ وَالْمُنكَرِ وَالْبَغْيِ يَعِظُكُمْ لَعَلَّكُمْ تَذَكَّرُونَ ﴿٩٠﴾

[1]अर्थात् प्रत्येक नबी आफ्ना अनुयायीहरूका लागि साक्षी हुनेछ तथा नबी सल्लल्लाहु अलैहि वसल्लम तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमका अनुयायीहरू नबीहरूको विषयमा साक्ष्य दिनेछन् कि यी सत्य हुन्, उनीहरूले नि:सन्देह तिम्रो सन्देश पुर्‍याइदिएका थिए (सहीह बुखारी तफ़सीर सूर: निसा)

[2]कितावसित तात्पर्य अल्लाहको किताव तथा नबी सल्लल्लाहु अलैहि वसल्लमको व्याख्या अर्थात् हदीस हो । आफ्ना हदीसहरूलाई पनि अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लमले अल्लाहको किताब भन्नुभएको छ । जस्तो कि उसैफ़को कथा आदिमा छ । (हेर्नुस् सहीह बुख़ारी किताबुल मुहारेबीन बाब हल यामुरू इमाम रजुलन फ़यज़रेबुल हद गायवन अन्ह, किताबुस सलात बाबु ज़िकल बैये वश शेराअे अलल मिम्बर फ़िल मस्जिद) तथा प्रत्येक वस्तुको अर्थ छ भूत तथा भविष्यका ती सूचनाहरू, जसको ज्ञान आवश्यक एवं लाभदायक छ । त्यसैप्रकार मान्य तथा निषेधको विवरण तथा ती कुराहरू जसका धर्म एवं संसार तथा व्यवसाय एवं जीविका सम्बन्धमा मनुष्य बाध्य छ । कुरआन तथा हदीस दुवैमा यी सबै कुराहरू स्पष्ट गरिएका छन् ।

[3]न्यायको साधारण अर्थ निष्पक्ष निर्णय गर्नु हो अर्थात आफन्ती तथा अरुहरू सबैसँग न्याय गरियोस् । कसैसँग शत्रुता तथा वैरभाव अथवा प्रेम तथा सम्बन्धका कारण न्यायका नियमहरूको उल्लघंन नहोस् । एउटा अर्को अर्थ सन्तुलन हो अर्थात कुनै विषयमा अधिकता एवं कमी नगरियोस्, यहाँसम्मकि धर्मको विषयमा पनि, किनभने धर्ममा अत्याधिकता, अतिशयोक्ति छ, जुनकि साह्रै निन्दनीय छ तथा कमी, धर्मको कार्यमा आलस्य हो, यो पनि अप्रिय छ । उपकारको एउटा अर्थ सद्व्यवहार, क्षमा हो । अर्को अथ

स्वयं तिमीलाई शिक्षा दिइराखिएको छ, ताकि तिमी शिक्षा प्राप्त गर ।

(९१) तथा अल्लाहसित गरिएको वचनलाई पूरा गर, तथा जब तिमी आपसमा वचन तथा अनुबन्ध गर्दछौ त सौगन्धहरूलाई उनको दृढता पश्चात भङ्ग नगर, जबकि तिमीले अल्लाह (तआला)

وَاَوْفُوْا بِعَهْدِ اللّٰهِ اِذَا عٰهَدْتُّمْ وَلَا تَنْقُضُوا الْاَيْمَانَ بَعْدَ تَوْكِيْدِهَا وَ قَدْ جَعَلْتُمُ اللّٰهَ

अधिक्य को हो अर्थात् देय अधिकारभन्दा अधिक दिनु अथवा अनिवार्य कर्मभन्दा अधिक कर्म गर्नु । जस्तो कसैको ज्याला सय रुपैयाँ निश्चित गरिएको छ, परन्तु दिंदाखेरि दस, बीस रुपैयाँ अधिक दिनु किनभने निर्धारित मजदूरी (ज्याला) सय रुपैयाँ थियो जुन मजदुरको वास्तविक अधिकार हो तथा यो न्याय हो । दस-बीस रुपैयाँ अधिक दिनु उपकार हो । न्यायवाट समाजमा शान्ति स्थापित हुन्छ, परन्तु उपकारवाट अधिक प्रेमभाव तथा आफ्नोपना उत्पन्न हुन्छ । तथा अनिवार्य कर्मलाई पूर्णरुपले गर्नुका उपरान्त ऐच्छिक कर्मको प्रबन्ध गर्नु, आवश्यक कर्मभन्दा अधिक कर्म हो, जसवाट अल्लाह तआलाको विशेष निकटता प्राप्त हुन्छ । उपकारको एउटा तेस्रो अर्थ हो पवित्र कर्म तथा उपासनाको सुन्दरता, जसलाई हदीसमा (أن تعبُدَ الله كأنّكَ تراهُ) (अल्लाहको इवादत यसप्रकार गर कि जस्तो तिमीले उसलाई देखिराखेका छौ) भनिएको छ (إيتاء ذي القربىٰ) (सम्बन्धिहरूका अधिकारलाई पूरा गर्नु अर्थात उनको सहायता गर्नु । यसलाई हदीसमा सम्बन्धलाई जोड्नु भनिएको छ तथा यसमाथि हदीसमा अत्याधिक जोड दिइएको छ । न्याय, तथा उपकारको वर्णन पश्चात यसको अलग्गैबाट वर्णन, यो पनि सम्बन्धलाई जोड्नुको महत्वलाई स्पष्ट गरिराखेको छ । (فحشآء) सित तात्पर्य निर्लज्जताका कर्म हुन् । अचेल निर्लज्जता यति सामान्य भइसकेको छ कि त्यसको नाम संस्कृति, उन्नति तथा कला परिहालेको छ अथवा "मनोरञ्जन" को नाममा त्यसको औचित्य मानिहालिएको छ । तर मात्र सुन्दर आवरणले कुनै वस्तुको वास्तविकता वदल्न सकिन्न, यसैप्रकार इस्लामी धार्मिक नियमहरूमा बलात्कार तथा त्यसका साधन, नाच, गीत, नग्नता तथा फैशनलाई, स्त्री-पुरुषका निर्लज्जतापूर्ण मिश्रण तथा मिश्रित समाज एवं अन्य यसैप्रकारका कुकर्महरूलाई निर्लज्जता भनिएको छ, यिनीहरू जति राम्रो नाम दिए पनि, पाश्चात्य देशबाट आयातित कुकर्म मान्यता प्राप्त गर्न सक्दैनन् । (منكر) प्रत्येक त्यो कार्य हो, जसलाई धार्मिक नियमहरूबाट अप्रिय घोषित गरिएको छ । तथा (بغي) को अर्थ अत्याचार तथा क्रुरता गर्नु हो । एक हदीसमा भनिएको छ कि सम्वन्ध विच्छेद तथा (بغي) यी दुबै अपराध अल्लाहलाई यति अप्रिय छन् कि अल्लाहको तर्फबाट (परलोकका अतिरिक्त) संसारमा पनि उनको शीघ्र दण्डको सम्भावनाको भय रहन्छ । (इब्ने माज: किताबुज़ ज़ोहद बाबुल बग्ये)

عَلَيْكُمْ كَفِيلًا ۗ إِنَّ اللَّهَ يَعْلَمُ مَا تَفْعَلُونَ ﴿٩١﴾

लाई आफ्नो उत्तरदायी (जामिन्) ठहराइसकेका छौ ।[1] तिमी जे-जति गर्दछौ, अल्लाह तआला त्यसलाई राम्ररी जान्दछ ।

وَلَا تَكُونُوا كَالَّتِي نَقَضَتْ غَزْلَهَا مِنْ بَعْدِ قُوَّةٍ أَنكَاثًا تَتَّخِذُونَ أَيْمَانَكُمْ دَخَلًا بَيْنَكُمْ أَن تَكُونَ أُمَّةٌ هِيَ أَرْبَىٰ مِنْ أُمَّةٍ ۚ إِنَّمَا يَبْلُوكُمُ اللَّهُ بِهِ ۚ وَلَيُبَيِّنَنَّ لَكُمْ يَوْمَ الْقِيَامَةِ مَا كُنتُمْ فِيهِ تَخْتَلِفُونَ ﴿٩٢﴾

(९२) तथा त्यस (स्त्री) जस्तो नहुनु जसले आफ्नो सूत बलियो रूपले काते पश्चात टुक्रा-टुक्रा गरी चुडालिदियो,[2] कि तिमी आफ्ना कसमहरूलाई परस्पर हस्तक्षेपका कारण बनाउ[3] यस कारण कि एउटा गुट अर्को गुटबाट उच्च हुन जाओस् । कुरा मात्र यही हो कि यस वचनबाट अल्लाहले तिम्रो परीक्षा लिइराखेको छ । निःसन्देह अल्लाह तआलाले तिम्रो लागि

[1]शपथ एक त त्यो हो, जुन कुनै सन्धि अथवा वचनको समय, त्यसलाई पक्का गर्नुको निम्ति खाइन्छ। दोस्रो, शपथ त्यो हो, जुन मनुष्य आफ्नो रूपले कुनै समय पनि लिन्छ कि अमुक कार्य गर्नेछु अथवा गर्नेछैन् । यहाँ आयतमा प्रथम वर्णित शपथको तात्पर्य हो कि तिमीले यहाँ सौगन्ध खाएका छौ, किनभने द्वितीय वर्णित सौगन्धको विषयमा हदीसमा आदेश दिइएको छ कि कुनै व्यक्ति कुनै कार्यको लागि पनि सौगन्ध खान्छ, अनि देख्दछ कि अधिक पुण्य अर्को कर्ममा छ (अर्थात् सौगन्धको विरूद्ध गर्नुमा) त त्यसले पुण्यको कार्य गरोस् तथा सौगन्धलाई तोडेर त्यसको कफ्फारा (प्रायश्चित) पूरा गरोस् । (सहीह मुस्लिम संख्या १२७२) नबी सल्लल्लाहु अलैहि वसल्लमको व्यवहारमा पनि यही थियो । (सहीह बुख़ारी संख्या ६६२३ तथा मुस्लिम संख्या १२६९)

[2]शपथद्वारा दिइएको वचनलाई तोड्नु यस्तो नै छ, जस्तो कुनै स्त्रीले सूत काते पश्चात त्यसलाई स्वयं नै टुक्रा-टुक्रा गरिहालोस् । यो उपमा हो ।

[3]अर्थात् धोखा, छल-कपटलाई साधन बनाउ ।

[4](أربى) को अर्थ अधिक हो अर्थात् जब तिमी देख्छौ कि तिमी अधिक भइहाल्यौ त आफ्नो अधिक संख्याको गर्वमा सौगन्ध तोडिदेउ, जबकि सौगन्ध तथा सन्धिको समय त्यो गुट कमजोर थियो, तर कमजोरीको उपरान्त पनि त्यो निश्चित थियो कि सन्धिका कारण हामीलाई हानि पुऱ्याउने छैन । परन्तु तिमीले विश्वासघातबाट तथा सन्धिलाई तोडेर हानि पुऱ्याउँछौ । अज्ञानकालमा चरित्रहीनताको कारण यसप्रकार सन्धिविच्छेद सामान्यरुपले ब्याप्त थियो । मुसलमानहरूलाई यस चरित्रहीनताबाट रोकियो ।

क़ेयामतका दिन प्रत्येक त्यो कुरालाई स्पष्ट गरेर वर्णन गरिदिनेछ, जसमा तिमीहरूले मतभेद गरिराखेका थियौ ।

وَلَوْ شَآءَ اللّٰهُ لَجَعَلَكُمْ اُمَّةً وَّاحِدَةً وَّلٰكِنْ يُّضِلُّ مَنْ يَّشَآءُ وَيَهْدِيْ مَنْ يَّشَآءُ ؕ وَلَتُسْـَٔلُنَّ عَمَّا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٩٣﴾

(९३) तथा यदि अल्लाह (तआला) ले चाहेको भए तिमी सबैलाई एउटै समूह बनाइदिन्थ्यो तर त्यसले जसलाई चाहन्छ विचलनमा छाडिदिन्छ तथा जसलाई चाहन्छ सोझो मार्ग देखाउँछ । तिमीले जे-जति पनि गरिराखेका छौ, त्यसको विषयमा अवश्य सोधपूछ गरिनेछ ।

وَلَا تَتَّخِذُوْٓا اَيْمَانَكُمْ دَخَلًا بَيْنَكُمْ فَتَزِلَّ قَدَمٌۢ بَعْدَ ثُبُوْتِهَا وَتَذُوْقُوا السُّوْٓءَ بِمَا صَدَدْتُّمْ عَنْ سَبِيْلِ اللّٰهِ ۚ وَلَكُمْ عَذَابٌ عَظِيْمٌ ﴿٩٤﴾

(९४) तथा तिमी आफ्ना सौगन्धहरूलाई आपसको छलकपटको साधन न बनाउ, अनि त तिम्रा पाइला आफ्ना स्थिरता पश्चात डग्मगाई हाल्नेछन् तथा तिमीले कठोर दण्ड चाख्नु पर्नेछ किनभने तिमीले अल्लाहको मार्गबाट रोक्यौ तथा तिमीलाई ठूलो घोर यातना दिइनेछ ।[1]

وَلَا تَشْتَرُوْا بِعَهْدِ اللّٰهِ ثَمَنًا قَلِيْلًا ؕ اِنَّمَا عِنْدَ اللّٰهِ هُوَ خَيْرٌ

(९५) तथा तिमी अल्लाहको प्रतिज्ञालाई तुच्छ मूल्यमा सौदा नगर, याद राख अल्लाह

[1]मुसलमानहरूलाई पुन: उपरोक्त वचन भङ्ग गर्नुबाट रोकिएको छ, त्यसतो नहोस् कि तिम्रो यस नैतिक पतनका कारण कसैको खुट्टा डग्मगाउन थालोस् तथा काफ़िर तिम्रो यो व्यवहार देखेर इस्लाम धर्म धारण गर्नबाट रोकियोस् तथा यसप्रकार तिमी मानिसहरूलाई अल्लाहको मार्गबाट रोक्नुको अपराधी तथा दण्डको अधिकारी बन्नपुग । केही व्याख्याकारहरूले (أيمانٌ) [यमीन (सौगन्ध) को अर्थमा] को बहुवचनबाट रसूलुल्लाह सल्लाहु अलैहि वसल्लमको बैयअत (अर्थात वचन दिनु) तात्पर्य लिएका छन् अर्थात नबी सल्लल्लाहु अलैहि वसल्लमको (बैयअत) अर्थात् उहाँसँग गरिएको वचनलाई तोडेर फेरि धर्मबाट विमुख नहुनु किनभने तिम्रो धर्म परिवर्तनलाई देखेर अन्य पनि इस्लाम धर्म धारण गर्नुबाट रोकिने छन् तथा यसप्रकार तिमी दुईगुना यातनाको अधिकारी बन्नेछौ । (फ़तहुल क़दीर)

لَكُمۡ إِن كُنتُمۡ تَعۡلَمُونَ ۝٩٥

को पासमा भएको वस्तु नै तिम्रो लागि उत्तम छ यदि तिमीमा ज्ञान छ ।

مَا عِندَكُمۡ يَنفَدُ وَمَا عِندَ ٱللَّهِ بَاقٖۗ وَلَنَجۡزِيَنَّ ٱلَّذِينَ صَبَرُوٓاْ أَجۡرَهُم بِأَحۡسَنِ مَا كَانُواْ يَعۡمَلُونَ ۝٩٦

(९६) तिम्रो पासमा जे-जति छ, सबै नाशवान छ तथा अल्लाहको पासमा जे-जति छ, स्थायी रहनेछ । तथा धैर्य गर्नेहरूलाई हामीले राम्रा कर्महरूको उत्तम प्रतिफल अवश्य प्रदान गर्नेछौं ।

مَنۡ عَمِلَ صَٰلِحٗا مِّن ذَكَرٍ أَوۡ أُنثَىٰ وَهُوَ مُؤۡمِنٞ فَلَنُحۡيِيَنَّهُۥ حَيَوٰةٗ طَيِّبَةٗۖ وَلَنَجۡزِيَنَّهُمۡ أَجۡرَهُم بِأَحۡسَنِ مَا كَانُواْ يَعۡمَلُونَ ۝٩٧

(९७) जो व्यक्ति पुण्यको कार्य गर्दछ, नरहोस् अथवा नारी, र त्यो निष्ठावान छ भने हामीले त्यसलाई निःसन्देह सर्वोत्तम जीवन प्रदान गर्नेछौं ।[1] तथा उनका पुण्यका कार्यहरूको उत्तम फल पनि उनीहरूलाई अवश्य दिनेछौं ।

فَإِذَا قَرَأۡتَ ٱلۡقُرۡءَانَ فَٱسۡتَعِذۡ بِٱللَّهِ مِنَ ٱلشَّيۡطَٰنِ ٱلرَّجِيمِ ۝٩٨

(९८) कुरआन पढ्दाखेरि धिक्कृत शैतानबाट अल्लाहको शरण माँग्ने गर ।[2]

إِنَّهُۥ لَيۡسَ لَهُۥ سُلۡطَٰنٌ عَلَى ٱلَّذِينَ ءَامَنُواْ وَعَلَىٰ رَبِّهِمۡ يَتَوَكَّلُونَ ۝٩٩

(९९) ईमान भएकाहरू तथा आफ्नो प्रभुमाथि भरोसा गर्नेहरूमाथि उसको कदापि केही लाग्दैन ।

[1]पवित्र जीवनसित तात्पर्य सांसारिक जीवन हो, यसकारण कि परलोकको जीवनको वर्णन अघिल्लो वाक्यमा छ तथा अर्थ यो हो कि सदाचारी मुसलमानलाई सत्य संयमशील जीवन व्यतीत गर्न तथा अल्लाहको इबादत तथा आज्ञापालन एवं भक्ति तथा सन्तोषमा जुन स्वाद तथा मिठोपना प्रतीत हुन्छ, त्यो एउटा काफिर तथा अवज्ञाकारीलाई संसारभरिका सुख-सुविधाका उपरान्त पनि प्राप्त हुँदैन, बरु त्यो एउटा व्यग्रता तथा अशान्तिको शिकार रहन्छ ।

﴿ وَمَنۡ أَعۡرَضَ عَن ذِكۡرِي فَإِنَّ لَهُۥ مَعِيشَةٗ ضَنكٗا ﴾

"जो मेरो स्मरणबाट विमुख भयो, त्यसको निर्वाह संकीर्ण हुनेछ ।" (सूर: ताहा-१२४)

[2]सम्बोधन यद्यपि नबी सल्लल्लाहु अलैहि वसल्लमसित छ तर सम्बोधित सम्पूर्ण मुसलमान छन् । अर्थात् कुरआन पाठ गर्नुको प्रारम्भमा (أَعُوذُ بِاللهِ مِنَ الشَّيْطٰنِ الرَّجِيمِ) पढियोस् ।

إِنَّمَا سُلْطَٰنُهُۥ عَلَى ٱلَّذِينَ يَتَوَلَّوْنَهُۥ وَٱلَّذِينَ هُم بِهِۦ مُشْرِكُونَ ﴿١٠٠﴾

(१००) हो, त्यसको प्रभाव उनीमाथि अवश्य छ, जो उसलाई मित्र बनाउँछन् तथा उसलाई अल्लाहको साझीदार बनाउँछन्।

وَإِذَا بَدَّلْنَآ ءَايَةً مَّكَانَ ءَايَةٍ ۙ وَٱللَّهُ أَعْلَمُ بِمَا يُنَزِّلُ قَالُوٓا۟ إِنَّمَآ أَنتَ مُفْتَرٍۭ ۚ بَلْ أَكْثَرُهُمْ لَا يَعْلَمُونَ ﴿١٠١﴾

(१०१) जब हामीले कुनै आयतको स्थानमा अन्य आयत ल्याउँछौं– तथा जे-जति अल्लाह (तआ़ला) अवतरित गर्दछ, त्यसलाई त्यो राम्ररी जान्दछ, तब यिनीहरू भन्दछन् कि तिमी त आक्षेप लगाउने व्यक्ति हौ। कुरो यो हो कि तिनीहरूमध्ये अधिकतर जान्दैनन्।[1]

قُلْ نَزَّلَهُۥ رُوحُ ٱلْقُدُسِ مِن رَّبِّكَ بِٱلْحَقِّ لِيُثَبِّتَ ٱلَّذِينَ ءَامَنُوا۟

(१०२) तपाईं भनिदिनुस् कि त्यसलाई तपाईंको पालनकर्ताको तर्फबाट जिब्रील सत्यका साथ लिएर आएका छन्,[2] ताकि ईमान भएकाहरूलाई अल्लाह

[1]अर्थात् एउटा आदेश निरस्त गरी त्यसको स्थानमा अर्को आदेश अवतरित गर्दछौं, जसको रहस्य तथा कारण अल्लाह तआ़ला राम्ररी जान्दछ तथा त्यसका अनुसार आदेशहरूमा परिवर्तन गर्दछ, त काफ़िर भन्दछन् कि यो कथन हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम)! तिमीले आफूले रचेको कुरा हो किनभने अल्लाह तआ़ला यस्तो गर्न सक्दैन। अल्लाह तआ़ला भन्दछ कि उनका अधिकतर मानिसहरू अज्ञानी छन्, यसकारण यो निरस्त गर्नुको कारण तथा रहस्य के जान्न सक्दछन् (र अधिक जानकारीको लागि हेर्नुस् सूरः अल-बक़र आयत १०६ को व्याखया)

[2]अर्थात् यो कुरआन मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमद्वारा रचित होइन। बरु यसलाई आदरणीय जिब्रील जस्ता महान फरिश्ताले सत्यका साथ प्रभुको तर्फबाट उतारेका छन्। जस्तो अन्य स्थानमा छ।

﴿نَزَلَ بِهِ الرُّوحُ الْأَمِينُ ☆ عَلَىٰ قَلْبِكَ﴾

"त्यसलाई सत्यात्मा (जिब्रील) ले तिम्रो हृदयमा अवतरित गरेका छन्।" (सूरः अल-शुअरा-१९३, १९४)

وَهُدًى وَّبُشْرٰى لِلْمُسْلِمِيْنَ ۝١٠٢

(तआला) ले स्थिरता प्रदान गरोस्[1] तथा मुसलमानहरूका लागि मार्ग-दर्शन तथा शुभ-सूचना होस्।[2]

وَلَقَدْ نَعْلَمُ اَنَّهُمْ يَقُوْلُوْنَ اِنَّمَا يُعَلِّمُهٗ بَشَرٌ ؕ لِسَانُ الَّذِيْ يُلْحِدُوْنَ اِلَيْهِ اَعْجَمِيٌّ وَّهٰذَا لِسَانٌ عَرَبِيٌّ مُّبِيْنٌ ۝١٠٣

(१०३) तथा हामीलाई राम्ररी ज्ञात छ जे काफ़िर भन्दछन् कि उसलाई त एउटा मानिसले सिकाउँछ[3] त्यसको भाषा जसतिर यिनीहरूले संकेत गरिराखेका छन् अजमी (स्वच्छ अरबी भाषा) होइन तथा यो कुर्आन त स्पष्ट अरबी भाषामा छ।

اِنَّ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِاٰيٰتِ اللّٰهِ ۙ لَا يَهْدِيْهِمُ اللّٰهُ وَلَهُمْ

(१०४) जुन मानिसहरू अल्लाह (तआला) का आयतहरूमा निष्ठावान छैनन्, उनीहरूलाई अल्लाहको तर्फबाट

[1]यसकारण कि उनीहरू भन्दछन् कि निरस्त तथा परिवर्तित दुबै प्रभुका तर्फबाट हुन्। यसका अतिरिक्त, निरस्तको कारण एवं रहस्य पनि जब उनका अगाडी आउँछन् त उनमा झन् अधिक स्थायित्व एवं ईमानमा दृढता आउँछ।

[2]तथा यो कुर्आन मुसलमानहरूका लागि मार्ग-दर्शन एवं शुभ-सूचनाको साधन हो किनभने कुर्आन पनि वर्षा समान छ जसवाट धर्तीको केही भाग अत्याधिक हराभरा हुन्छ तथा केहीमा काँडा एवं सुख्खा घाँसका अतिरिक्त केही उम्रिँदैन। ईमानवालाहरूको हृदय पवित्र एवं उज्ज्वल छ, जुन कुर्आनको महिमाबाट तथा ईमानको प्रकाशले प्रकाशित हुन्छ तथा काफ़िरको हृदय बाँझो भूमिको जस्तो छ, जुन कुफ़्र एवं मार्ग-भ्रष्टताको अँध्यारोले भरिएको छ, जहाँ कुर्आनको ज्योतिको पनि प्रभाव हुँदैन।

[3]केही दास थिए, जो तौरात तथा इंजीलसित अवगत थिए, पहिला उनीहरू यहूदी तथा ईसाई थिए, त्यस पश्चात मुसलमान भए, उनको भाषा पनि अस्वच्छ थियो, मक्काका मूर्तिपूजक भन्दथे कि अमुक दास मुहम्मदलाई कुर्आन सिकाउँछ।

[4]अल्लाह तआलाले उत्तरमा भन्यो कि यिनी जुन व्यक्ति अथवा व्यक्तिहरूको नाम लिन्छन्, तिनीहरू त अरबी भाषा पनि उचित ढङ्गले बोल्न सक्दैनथे, जबकि कुर्आन त यस्तो स्वच्छ भाषामा छ जुन प्रभावशाली, हृदयस्पर्शी एवं मार्मिक वर्णनमा अतुलनीय छ तथा चुनौतीका उपरान्त पनि यसको समान एक अंश पनि बनाएर प्रस्तुत गर्न सक्दैनन्। अरबी भाषामा त्यस व्यक्तिलाई अजमी (लाटो) भन्दथे, जो स्वच्छ एवं सरल भाषा बोल्ने योग्य हुँदैनथ्यो तथा अरबी भाषी बाहेकलाई पनि अजमी भनिन्छ किनकि अजमी भाषाहरूमा प्रवाह तथा प्रभावमा अरबी भाषाको तुलना गर्न सकिँदैन।

عَذَابٌ اَلِيۡمٌ ۝

पनि मार्गदर्शन प्राप्त हुँदैन तथा उनीहरूका लागि दुखदायी यातना छ ।

اِنَّمَا يَفۡتَرِى الۡـكَذِبَ الَّذِيۡنَ لَا يُؤۡمِنُوۡنَ بِاٰيٰتِ اللّٰهِ‌ ۚ وَاُولٰۤـئِكَ هُمُ الۡـكٰذِبُوۡنَ ۝

(१०५) मिथ्या आरोप त उनीहरूले नै लगाउँछन् जसलाई अल्लाह (तआला) का आयतहरूमा ईमान (विश्वास) हुँदैन । र यी मानिसहरू नै असत्य हुन् ।[1]

مَنۡ كَفَرَ بِاللّٰهِ مِنۡۢ بَعۡدِ اِيۡمَانِهٖۤ اِلَّا مَنۡ اُكۡرِهَ وَقَلۡبُهٗ مُطۡمَـئِنٌّ ۢ بِالۡاِيۡمَانِ وَلٰـكِنۡ مَّنۡ شَرَحَ بِالۡكُفۡرِ صَدۡرًا فَعَلَيۡهِمۡ غَضَبٌ مِّنَ اللّٰهِ‌ ۚ وَلَهُمۡ عَذَابٌ عَظِيۡمٌ ۝

(१०६) जसले आफ्नो ईमान पश्चात अल्लाहसँग कुफ्र गर्‍यो–त्यस अवस्थामा बाहेक जसको लागि उसलाई विवश गरिएको छ र त्यसको हृदय ईमानमा सन्तुष्ट छ,[2] परन्तु जो मानिसहरू खुल्ला हृदयले कुफ्र गर्दछन्, त उनीमाथि अल्लाहको क्रोध छ तथा उनको लागि ठूलो यातना छ ।[3]

ذٰلِكَ بِاَنَّهُمُ اسۡتَحَبُّوا الۡحَيٰوةَ الدُّنۡيَا عَلَى الۡاٰخِرَةِ ۙ وَاَنَّ اللّٰهَ

(१०७) यो यसकारण कि उनीहरूले सांसारिक जीवनलाई पारलौकिक जीवनभन्दा प्रियतर ठाने ।

[1]तथा हाम्रो पैगम्बर ईमानदारहरूको प्रमुख तथा उनीहरूको अगुवा हो, त्यसले कसरी अल्लाहमाथि झूटो आरोप लगाउन सक्छ कि यो किताब अल्लाहको तर्फबाट उसमाथि अवतरित न भएको होस्, तथा त्यसले भनिदेओस् कि यो किताव ममाथि अल्लाहको तर्फबाट अवतरित भएको हो । यसकारण झूटो हाम्रो पैगम्बर होइन, ती स्वयं झूटा हुन् जो कुर्आनलाई अल्लाहको तर्फबाट अवतरित हुने कुरोलाई स्वीकार गर्दैनन् ।

[2]ज्ञानीहरूको यस कुरामा सहमति छ कि जुन व्यक्तिलाई कुफ्रको लागि बाध्य गरिन्छ तथा त्यो प्राण रक्षाको लागि कर्म तथा वचनले कुफ्र गर्दछ, जबकि उसको हृदय ईमानमा दृढ छ, त त्यो काफिर हुनेछैन, तथा न उसको पत्नी उसबाट अलग्ग हुनेछ तथा न उसमाथि अन्य कुफ्रका आदेश लागू गरिनेछन् । कुर्तबीको यो कथन हो । (फतहुल क़दीर)

[3]यो धर्म त्यागको दण्ड हो कि उनी अल्लाहको क्रोध तथा घोर यातनाका अधिकारी हुनेछन् तथा त्यसको सांसारिक दण्ड हत्या हो । जस्तो कि हदीसमा वर्णित छ । (अन्य जानकारीका लागि हेर्नुहोस् सूरः बक़रः आयत २१७ तथा २५६को व्याख्या)

لَا يَهْدِى الْقَوْمَ الْكٰفِرِيْنَ ۝١٠٧

निःसन्देह अल्लाह (तआ़ला) काफ़िरहरूको मार्गदर्शन गर्दैन ।

اُولٰٓئِكَ الَّذِيْنَ طَبَعَ اللّٰهُ عَلٰى قُلُوْبِهِمْ وَسَمْعِهِمْ وَاَبْصَارِهِمْ ۚ وَاُولٰٓئِكَ هُمُ الْغٰفِلُوْنَ ۝١٠٨

(१०८) यी त्यस्ता हुन्, जसका हृदय, कान तथा आँखाहरूमा अल्लाहले मोहर (छाप) लगाइदिएको छ तथा यी नै अचेत हुन् ।[२]

لَا جَرَمَ اَنَّهُمْ فِى الْاٰخِرَةِ هُمُ الْخٰسِرُوْنَ ۝١٠٩

(१०९) यसमा कुनै सन्देह छैन कि यिनीहरू नै आख़िरतमा अधिक हानिमा पर्नेहरू हुन् ।

ثُمَّ اِنَّ رَبَّكَ لِلَّذِيْنَ هَاجَرُوْا مِنْۢ بَعْدِ مَا فُتِنُوْا ثُمَّ جٰهَدُوْا وَصَبَرُوْٓا ۙ اِنَّ رَبَّكَ مِنْۢ بَعْدِهَا لَغَفُوْرٌ رَّحِيْمٌ ۝١١٠

(११०) अनि जुन मानिसहरूले परीक्षामा पारिए पश्चात (धार्मिक कारणहरूले) स्थानान्तरण गरे, त्यसपछि धर्मयुद्ध गरे एवं धैर्यको प्रदर्शन गरे । निःसन्देह तिम्रो प्रभु यी कुराहरू पश्चात उनीहरूका लागि क्षमाशील तथा कृपालु छ ।[३]

---

[१]यो ईमान पश्चात कुफ़्रको मार्ग अपनाउनु (अधर्मी हुनु) को कारण हो कि उनीहरूलाई एक त संसारिक मोह छ, दोस्रो अल्लाहको दरबारमा यिनीहरू मार्ग-दर्शनका योग्य छैनन् ।

[२]यिनीहरू त न शिक्षा-दीक्षाको कुरा सुन्दछन् न उनलाई बुझ्दछन् तथा न उनी निशानीहरू (लक्षण) देख्दछन् जुन उनीहरूलाई सत्यतिर लग्ने कुरा छन् । बरु उनीहरू यस्ता चेतनहीनतामा घेरिएका छन्, जसले प्रकाशको मार्ग उनीहरूको लागि थुनिएको छ ।

[३]यो मक्काका ती मुसलमानहरूको वर्णन हो जो कमजोर थिए तथा इस्लाम धर्म धारण गर्नुका कारण काफ़िरहरूको अत्याचार तथा क्रुरताका निशाना बनेका थिए । अन्ततः उनीहरूलाई स्थानान्तरणको आदेश दिइयो त उनीहरू आफ्ना नजीकका सम्बन्धिहरू, देश तथा धर्ती एवं माल तथा भूमि सबै कुरा छाडेर इथोपिया अथवा मदीना गइहाले, अनि जब काफ़िरहरूसँग युद्धको अवसर आयो त वीरतापूर्वक लड्नका लागि धर्मयुद्धमा पूर्णरूपले भाग लिए तथा त्यस मार्गका कठिनाई तथा दुखहरूलाई धैर्यका साथ सहन गरे । यी सबै कुराहरूको पश्चात निःसन्देह उनका लागि तिम्रो प्रभु दयालु एवं कृपालु छ अर्थात् प्रभुको दया एवं कृपाको प्राप्तिको लागि ईमान तथा पुण्यको कर्म हुनु आवश्यक छ । जस्तो कि वर्णित मुहाजिरहरूले ईमान तथा कर्मको सर्वोत्तम प्रदर्शन गरे, त प्रभुको दया एवं कृपाले उनीहरू सफल भए ।

يَوْمَ تَأْتِي كُلُّ نَفْسٍ تُجَادِلُ عَنْ نَّفْسِهَا وَتُوَفّٰى كُلُّ نَفْسٍ مَّا عَمِلَتْ وَهُمْ لَا يُظْلَمُوْنَ ﴿١١١﴾

(१११) जुन दिन प्रत्येक व्यक्ति आफ्नो लागि विवाद गर्दै आउनेछ।[1] तथा प्रत्येकलाई जे-जति गरेको हुनेछ, त्यसको पूरा-पूरा प्रतिफल प्रदान गरिनेछ, तथा मानिसहरूमाथि अलिकति पनि अत्याचार हुनेछैन।[2]

وَضَرَبَ اللّٰهُ مَثَلًا قَرْيَةً كَانَتْ اٰمِنَةً مُّطْمَئِنَّةً يَّاْتِيْهَا رِزْقُهَا رَغَدًا مِّنْ كُلِّ مَكَانٍ فَكَفَرَتْ بِاَنْعُمِ اللّٰهِ فَاَذَاقَهَا اللّٰهُ لِبَاسَ الْجُوْعِ وَالْخَوْفِ بِمَا كَانُوْا يَصْنَعُوْنَ ﴿١١٢﴾

(११२) तथा अल्लाह (तआला) त्यस बस्तीको उदाहरण प्रस्तुत गर्दछ, जुन पूर्ण सुख शान्तिमा थियो, त्यसको जीविका त्यसको पासमा सम्पन्नताका साथ प्रत्येक मार्गबाट आइराखेको थियो। पछि त्यसले अल्लाह (तआला) का अनुकम्पाहरूको इन्कार गऱ्यो, तब अल्लाह (तआला) ले त्यसलाई भोक तथा भयको स्वाद चखाइदियो जुन उनका कर्तूतहरूको[3] प्रतिफल थियो।

[1]अर्थात् कोही अन्य कसैको सहायताको लागि आउने छैन न पिता, न भाई, न पुत्र, न पत्नी, न कोही अरु। बरु एक-अर्काबाट टाढा भाग्नेछन्। भाई-भाईबाट, पुत्र माता-पिताबाट, पति-पत्नीबाट भाग्ने छन्। प्रत्येक व्यक्तिलाई केवल आफ्नै चिन्ता हुनेछ, जुन उसलाई अर्कोबाट निश्चित गरिदिनेछ।

[2]अर्थात् पुण्यको फलमा कमी गरिन्छ तथा नराम्रोको प्रतिकार बढाइन्छ, यस्तो हुने छैन, कसैमाथि अलिकति पनि अत्याचार हुनेछैन। नराम्रो कुराको मात्र त्यति नै प्रतिफल प्राप्त हुनेछ, जति मात्रामा त्यो हुनेछ। तर पुण्यको प्रतिफल अल्लाह तआलाले निकै वृद्धि गरेर दिनेछ तथा यो त्यसको उपकार एवं दयाको प्रदर्शन हुनेछ जुन क़ेयामतका दिन ईमानवालाहरूलाई हुनेछ।

[3]अधिकतर व्याख्याकारहरूले यस ग्रामबाट तात्पर्य मक्कासित लिएका छन्। अर्थात् यसमा मक्का तथा मक्कावासीहरूको वर्णन गरिएको छ तथा यो त्यसो भयो जब अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लमले उनका लागि शापको प्रार्थना गर्नुभयो :

اَللّٰهُمَّ اشْدُدْ وَطْأَتَكَ عَلٰى مُضَرَ، وَاجْعَلْهَا عَلَيْهِمْ سِنِيْنَ كَسِنِيْ يُوْسُفَ

"हे अल्लाह ! मुजर (क़बीला) माथि आफ्नो पकड कडा गर तथा उनीमाथि अकाल त्यस किसिमले पार जस्तो आदरणीय यूसुफको समयमा मिश्रमा भयो। (सहीह बुख़ारी संख्या ४८२१, सहीह मुस्लिम संख्या २१५६)"

وَلَقَدْ جَآءَهُمْ رَسُولٌ مِّنْهُمْ فَكَذَّبُوهُ فَأَخَذَهُمُ الْعَذَابُ وَهُمْ ظَٰلِمُونَ ﴿١١٣﴾

(११३) तथा उनीहरूको पासमा उनीहरू मध्येबाट नै रसूल पुग्यो, तैपनि उनीहरूले त्यसलाई भुट्ठ्याए, अतः उनीहरूलाई प्रकोपले आइसमात्यो ।[1] तथा उनीहरू थिए पनि अत्याचारी नै ।

فَكُلُوا۟ مِمَّا رَزَقَكُمُ ٱللَّهُ حَلَٰلًا طَيِّبًا وَٱشْكُرُوا۟ نِعْمَتَ ٱللَّهِ إِن كُنتُمْ إِيَّاهُ تَعْبُدُونَ ﴿١١٤﴾

(११४) जे-जति उचित वैध (हलाल) तथा पवित्र जीविका अल्लाहले तिमीलाई प्रदान गरेको छ, त्यसलाई खाउ तथा अल्लाहका अनुकम्पाप्रति कृतज्ञता व्यक्त गर, यदि तिमी उसैको उपासना गर्दछौ ।[2]

إِنَّمَا حَرَّمَ عَلَيْكُمُ ٱلْمَيْتَةَ وَٱلدَّمَ وَلَحْمَ ٱلْخِنزِيرِ وَمَآ أُهِلَّ

(११५) उसले त तिम्रो लागि केवल मृत, रगत, सुंगुरको मासु र जसमा अल्लाह बाहेक अरु कसैको नाम लिएको छ, हराम (निषेध) छ,[3] ।

अतः अल्लाह तआलाले मक्काको शान्तिलाई भयमा तथा सम्पन्नतालाई भोकमरीमा बदलिदियो । यहाँसम्मकि उनीहरूको यो दशा भयो कि हाड तथा वृक्षका पातहरू खाएर जीवन निर्वाह गर्नुपर्‍यो । तथा केही व्याख्याकारहरूको विचार छ कि यो अनिश्चित ग्राम हो तथा उदाहरणको रूपमा यो कुरा भनिएको हो कि उपकारलाई अस्वीकार गर्नेहरूको यही अवस्था हुनेछ, उनीहरू जहाँ भएपनि तथा जहिले भएपनि । यसको यस सामान्य भावार्थबाट अधिकांश ब्याख्याकारहरूलाई पनि इन्कार छैन, यद्यपि यस अवतरणको कारण उनका निकट विशेष छ ।

[1]यस यातनाबाट तात्पर्य त्यही यातना भय तथा भोक हो, जसको वर्णन यसभन्दा पहिलाको आयतमा छ अथवा यसबाट तात्पर्य काफिरहरूको त्यो हत्या हो जुन बद्रको युद्धमा मुसलमानहरूद्वारा भयो ।

[2]यसको अर्थ यो भयो कि वैध तथा पवित्र वस्तुहरूलाई छाडेर निषेधित तथा अपवित्र वस्तुहरूको प्रयोग तथा अल्लाहलाई छाडेर कुनै अन्यको इबादत (उपासना) गर्नु, यो अल्लाहका उपकारहरूको कृतघ्नता हो ।

[3]यो आयत यसभन्दा पहिला तीन पटक आइसकेको छ । सूरः अल-बकरः-१७३, सूरः अल-मायदः-३, तथा सूरः अल-अनआम-१४५ । यो चौथो स्थान हो, जहाँ अल्लाह तआलाले पुनः वर्णन गरेको छ, जसबाट यो स्पष्ट हुन्छ कि यस आयतमा जुन चारवटा निषेधित कुराहरूको वर्णन छ, तीनीहरूबाट अल्लाह तआला मुसलमानहरूलाई अति बलपूर्वक बचाउन चाहन्छ । यसको आवश्यक व्याख्या पहिले नै गरिसकिएको छ । तैपनि यसमा ﴿وَمَآ أُهِلَّ لِغَيْرِ ٱللَّهِ بِهِۦ﴾ (जुन कुरोमा अल्लाहको अतिरिक्त अन्यको नाम लिइयोस्) जुन

चौथो प्रकार हो यसको भावार्थमा तर्क, कल्पना एवं व्याख्या गरी शिर्कका लागि चोर ढोका खोजिन्छन् । यसकारण त्यसको केही अरु व्याख्या प्रस्तुत छ, ।

जुन पशु अल्लाहका अतिरिक्त अन्य कसैलाई अर्पित गरिन्छ, त्यसका विभिन्न प्रकार छन् । एकप्रकार यो हो कि अल्लाहको अतिरिक्त अन्यको निकटता तथा प्रसन्नता प्राप्त गर्न त्यसको बलि दिइयोस् तथा बलि चढाउँदाखेरि त्यसै देवता, मूर्ति अथवा महात्माको नाम लिइयोस् जसलाई प्रसन्न गर्ने उद्देश्य हुन्छ । दोस्रो प्रकार यो हो कि उद्देश्य त अल्लाहका अतिरिक्त अन्यको प्रसन्नताको हुन्छ तर बलि अल्लाहको नाममा दिइन्छ, जसरी समाधिका पूजारीहरूमा यो कार्य सामान्यरुपले पाईन्छ । उनी पशुहरूलाई महात्माहरूको नामबाट नामाकिंत गर्दछन् । जस्तै यो खसी अमुक पीरको हो, यो गाई अमूक पीरको हो, यो पशु एघारौंको लागि अर्थात् शेख अब्दुल क़ादिर जीलानीको लागि हो आदि । तथा उनको बलि बिस्मिल्लाह पढेर नै दिन्छन्, यसकारण उनी भन्दछन् कि पहिलो प्रकार अवश्य निषेधित छ, परन्तु यो दोस्रो प्रकार निषेधित छैन, वरु मान्य छ किनभने यो अल्लाहका अतिरिक्त अरु कसैको नाममा बलि दिइएको छैन र यसप्रकार शिर्कको मार्ग खोलिएको छ, जबकि विचारकहरूले यस दोस्रो प्रकारलाई पनि निषेधित भनेका छन् । यसकारण कि यो पनि ﴿وَمَا أُهِلَّ لِغَيْرِ اللَّهِ بِهِ﴾ मा सम्मिलित छ, अत: वैजवीको व्याख्यामा छ "प्रत्येक त्यो पशु जसमा अल्लाहको अतिरिक्त अन्य कसैको नाम पुकारिन्छ, निषेध छ, यद्यपि बलि दिंदाखेरि त्यसमा अल्लाहकै नाम लिइएको होस् । यसकारण धर्मज्ञानीहरू सहमत छन् कि मुसलमान यदि अल्लाहको अतिरिक्त अन्य कसैको निकटता प्राप्त गर्नको लागि पशुको बलि दिनेछ भने त्यो विधर्मी भइहाल्नेछ तथा त्यसको बलि विधर्मीको बलि हुनेछ ।" तथा हनफ़ी विचार को प्रख्यात पुस्तक 'दुर्रे मुख़्तार' मा छ,"कुनै अधिकारी तथा त्यसैप्रकार कुनै उच्च अधिकरीको आगमनमा (त्यसको अतिथ्यको लागि होइन बरु त्यसलाई खुशी पार्न अथवा त्यसको सम्मानस्वरुप) पशुको बलि दिइन्छ, भने त्यो निषेधित हुनेछ यसकारण कि त्यो ﴿وَمَا أُهِلَّ لِغَيْرِ اللَّهِ بِهِ﴾ मा आइहाल्यो, यद्यपि त्यसमा अल्लाहकै नाम लिइएको होस् तथा अल्लाहमा शामीले यसमा बल दिनुभएको छ ।" (किताबुल ज़बाएह प्राचीन प्रकाशन १२७७ हिजरी, पृष्ठ २२७ फ़तावा शामी भाग ५, पृष्ठ २०३, मेमनीय: प्रकाशन मिस्र) तर केही विचारकहरूले यस दोस्रो प्रकारलाई ﴿وَمَا ذُبِحَ عَلَى النُّصُبِ﴾ को अर्थ तथा यसमा सम्मिलित ठान्दैनन् तथा अल्लाह बाहेक अन्यको निकटताको प्राप्त गर्नाको कारण यसलाई निषेधित ठान्दछन् । अर्थात् निषेध हुने कुरोमा कुनै मतभेद छैन । केवल तर्क तथा प्रमाण प्रस्तुत गर्ने तरिकामा मतभेद छ । यसको अतिरिक्त यो दोस्रो

لِغَيْرِ اللّٰهِ بِهٖ ۚ فَمَنِ اضْطُرَّ
غَيْرَ بَاغٍ وَّلَا عَادٍ فَاِنَّ اللّٰهَ
غَفُوْرٌ رَّحِيْمٌ ﴿١١٥﴾

तैपनि यदि कोही यसप्रकार विवश गरिएको हुन्छ जबकि त्यो न अत्याचारी छ, न सीमा उल्लघंन गर्ने व्यक्ति छ, त निःसन्देह अल्लाह क्षमाशील तथा कृपानिधान छ ।

وَلَا تَقُوْلُوْا لِمَا تَصِفُ
اَلْسِنَتُكُمُ الْكَذِبَ هٰذَا حَلٰلٌ
وَّهٰذَا حَرَامٌ لِّتَفْتَرُوْا عَلَى اللّٰهِ
الْكَذِبَ ؕ اِنَّ الَّذِيْنَ
يَفْتَرُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ
لَا يُفْلِحُوْنَ ﴿١١٦﴾

(११६) तथा कुनै कुरोलाई आफ्नो मुखले असत्य नै भन्ने नगर कि यो उचित (हलाल) छ तथा यो निषेध (हराम) छ ताकि अल्लाहमाथि मित्थ्यारोपण गर्न पुग, निःसन्देह अल्लाह (तआ़ला) माथि मिथ्यारोपण गर्नेहरू सफलताबाट बञ्चित नै रहन्छन् ।

مَتَاعٌ قَلِيْلٌ ۪ وَّلَهُمْ عَذَابٌ
اَلِيْمٌ ﴿١١٧﴾

(११७) उनीहरूलाई अति तुच्छ लाभ प्राप्त हुन्छ तथा उनका लागि नै कष्टदायी यातनाहरू छन् ।

وَعَلَى الَّذِيْنَ هَادُوْا حَرَّمْنَا

(११८) तथा यहूदीहरूका लागि हामीले जे निषेध गरेका थियौं, त्यसलाई हामीले अघिनै तपाईंलाई सुनाई



एक हदीसमा वर्णित छ, कि एउटा व्यक्ति आएर रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित भन्यो कि मैले मन्नत (भाकल) गरेको छु कि बवानाको स्थानमा म ऊँटको बलि चढाउनेछु। उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सोध्नु भयो कि के त्यहाँ अज्ञानकालका मूर्तिहरूमध्ये कुनै मूर्ति थियो, जसको पूजा गरिन्थ्यो ? मानिसहरूले भने, होइन, त्यसपछि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सोध्नुभयो कि त्यहाँ उनीहरूको धार्मिक उत्सवहरूमध्ये कुनै उत्सव त मनाइन्थ्यो ? मानिसहरूले त्यसको पनि नकारात्मक उत्तर दिए, तव सल्लल्लाहु अलैहि वसल्लमले प्रश्नकर्तालाई मन्नत पूरा गर्ने अनुमति दिनु हो भो (अवू दाऊद किताबुल ऐमान वन्नजुर, बाब मायूमर, विहि मिन वफ़ाइन्नज्र) यसवाट ज्ञात भयो कि मूर्तिहरूलाई हटाए पश्चात पनि निर्वासित आस्तानाहरूमा गएर पशुहरूको बलि चढाउनु निषेध छ, भनेपछि त्यसको के कुरा गर्ने जवकि ती आस्ताना (मठ), दरवार, मन्दिर तथा दैवी स्थलहरूमा गई बलि चढाईन्छ, जुन पूजा-पाठ, भोग-प्रसादको लागि सामान्य घोषित स्थल छन् ।

[1]यो संकेत हो कि पशुहरूतिर जुन उनीहरूले मूर्तिहरूका नाम अर्पित गरी उनलाई आफ्नो लागि निषेध गर्दथे । जस्तै वाहिरः, साएबः, वसीलः एवं हाम आदि । (हेर्नुस सूरः अल-मायदः-१०३ तथा सूरः अल-अनाम-१३९ देखि १४१ सम्मको ब्याख्या)

مَا قَصَصْنَا عَلَيْكَ مِن قَبْلُ ۖ وَمَا ظَلَمْنَاهُمْ وَلَٰكِن كَانُوا أَنفُسَهُمْ يَظْلِمُونَ ﴿١١٨﴾

सकेका छौं,[1] हामीले उनीहरूमाथि अत्याचार गरेनौं बरु उनीहरूले स्वयं आफ्ना प्राणमाथि अत्याचार गरिरहे ।

ثُمَّ إِنَّ رَبَّكَ لِلَّذِينَ عَمِلُوا السُّوءَ بِجَهَالَةٍ ثُمَّ تَابُوا مِن بَعْدِ ذَٰلِكَ وَأَصْلَحُوا إِنَّ رَبَّكَ مِن بَعْدِهَا لَغَفُورٌ رَّحِيمٌ ﴿١١٩﴾

(११९) जसले अज्ञानतावश नराम्रो कर्म गर्‍यो, फेरि त्यस पश्चात तौबा (क्षमा-याचना) गर्‍यो तथा सुधार पनि गर्‍यो, त निश्चय नै तपाईंको प्रभु बडो क्षमाशील तथा अत्यन्त दयालु छ ।

إِنَّ إِبْرَاهِيمَ كَانَ أُمَّةً قَانِتًا لِّلَّهِ حَنِيفًا وَلَمْ يَكُ مِنَ الْمُشْرِكِينَ ﴿١٢٠﴾

(१२०) निःसन्देह इब्राहीम अगुवा[2] एवं अल्लाह तआलाको आज्ञा पालना गर्ने एकाग्र निःस्वार्थ थिए । तथा उनी मिश्रणबादीहरू मध्ये थिएनन् ।

شَاكِرًا لِّأَنْعُمِهِ ۚ اجْتَبَاهُ وَهَدَاهُ إِلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿١٢١﴾

(१२१) अल्लाह तआलाद्वारा प्रदान गरिएका उपहारहरूप्रति कृतज्ञ थिए, अल्लाह (तआला) ले उनलाई निर्वाचित गरिहालेको थियो तथा उनलाई मार्गदर्शन दिएको थियो ।

وَآتَيْنَاهُ فِي الدُّنْيَا حَسَنَةً ۖ وَإِنَّهُ فِي الْآخِرَةِ لَمِنَ الصَّالِحِينَ ﴿١٢٢﴾

(१२२) तथा हामीले उनलाई संसारमा पनि भलाई प्रदान गर्‍यौं तथा निःसन्देह उनी आख़िरतमा पनि नेक (सत्कर्मी) मानिसहरूमध्ये हुनेछन् ।

ثُمَّ أَوْحَيْنَا إِلَيْكَ أَنِ اتَّبِعْ مِلَّةَ إِبْرَاهِيمَ حَنِيفًا ۖ وَمَا كَانَ

(१२३) अनि हामीले तपाईंतिर प्रकाशना (वह्यी) पठायौं कि तपाईं इब्राहीम हनीफ़को मतको

[1]हेर्नुस् सूरः अल-अनाम-१४६ को व्याख्या, यसको अतिरिक्त सूरः निसा-१६० मा यसको वर्णन छ ।

[2]उम्मतको अर्थ मुखिया तथा अगुवा पनि हो, जस्तो कि अनुवादबाट स्पष्ट छ तथा उम्मतको अर्थ अनुयायी पनि हो, यस आधारमा आदरणीय इब्राहीमको अस्तित्व एउटा उम्मत बराबर थियो । (उम्मतको अर्थको लागि सूरः हूद-८ को व्याख्या हेर्नुस्)

مِنَ الْمُشْرِكِينَ ١٢٣

अनुसरण गर्नुस् ।[1] र उनी मिश्रणवादीहरू (अनेकेश्वरका पूजारीहरू) मध्ये थिएनन् ।

إِنَّمَا جُعِلَ السَّبْتُ عَلَى الَّذِينَ اخْتَلَفُوا فِيهِ ۚ وَإِنَّ رَبَّكَ لَيَحْكُمُ بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ فِيمَا كَانُوا فِيهِ يَخْتَلِفُونَ ١٢٤

(१२४) शनिवारका दिन (को महत्व) लाई त मात्र तिनीहरूको लागि नै आवश्यक गरिएको थियो, जसले त्यसमा मतभेद गरेका थिए,[2] कुरा यो हो कि तपाईंको प्रभुले स्वयं नै उनीहरूमा उनको मतभेदको निर्णय कयामतको दिन गर्नेछ ।

[1]मिल्लतको अर्थ हो यस्तो धर्म जसलाई अल्लाह तआलाले आफ्नो कुनै नबीद्वारा मानिसहरूका लागि उचित तथा अनिवार्य गरेको छ । नबी सल्लल्लाहु अलैहि वसल्लमको यस उपरान्त कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम सबै नबीहरू सहित आदमका सन्तानका सरदार (प्रमुख) हुनुहुन्छ, उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई इब्राहीमका धार्मिक नियमहरूको अनुसरण गर्न भनिएको छ, जसबाट आदरणीय इब्राहीमको महत्व एवं विशेषताको पुष्टि हुन्छ । त्यसो त मौलिकरूपले सबै नबीहरूको धार्मिक नियम एवं मत एउटै नै रहेका छन्, जसमा रिसालतका साथ अद्वैत तथा आख़िरतलाई आधारभूत स्थान प्राप्त छ ।

[2]यस मतभेदको रूप के हो ? यसको व्याख्यामा मतभेद छ, केही ज्ञाताहरू भन्दछन् कि आदरणीय मूसाले उनका लागि शुक्रवारको दिन निर्धारित गरेका थिए, तर इस्राईलका सन्तानले उनको विरोध गरे तथा शनिवारको दिन आदर तथा इबादतको लागि चयन गरे । अल्लाह तआलाले भन्यो, मूसा ! उनीहरूले जुन दिन चयन गरेका छन्, त्यही दिन रहनदेउ । केही ज्ञाताहरू भन्दछन् कि अल्लाह तआलाले उनीहरूलाई आदेश दिएको थियो कि सम्मानका लागि सप्ताहमा कुनै एक दिन निर्धारित गर जसको निर्धारणमा उनीहरूमा आपसी मतभेद भयो तर यहूदीहरूले आफ्नो विचारले शनिवारको दिन तथा इसाईहरूले रविवारको दिन यहूदीहरूको विरोध भावनाले आफ्नो लागि निर्धारित गरेका थिए, यसैप्रकार इबादतको लागि उनीहरूले आफूलाई अलग्ग राख्नको लागि बैतुल मोकद्दसको पूर्वी भागलाई क़िब्लाको रूपमा प्रयोग गरे । शुक्रवारको दिन अल्लाह तआलाले आफ्नो तर्फबाट मुसलमानहरूको लागि निर्धारित गर्नुको वर्णन हदीसमा विद्यमान छ । (हेर्नुस् सहीह बुख़ारी किताबुल जुमा, बाब हिदायत हाज़ेहिल उम्मत, लेयोमिल जुमुअः, तथा सहीह मुस्लिम वर्णित अध्याय)

(१२५) आफ्नो प्रभुतिर मानिसहरूलाई विवेक तथा उत्तम शिक्षाका साथ बोलाउनुस् तथा उनीसित राम्रो प्रकारले कुरा गर्नुस्,[1] निःसन्देह तपाईंको प्रभु आफ्ना मार्गबाट विचलित हुनेहरूलाई पनि राम्ररी जान्दछ तथा त्यो मार्गमा हिंड्नेहरूसित पनि पूर्णरुपले परिचित छ ।[2]

ادْعُ إِلَىٰ سَبِيلِ رَبِّكَ بِالْحِكْمَةِ وَالْمَوْعِظَةِ الْحَسَنَةِ ۖ وَجَادِلْهُم بِالَّتِي هِيَ أَحْسَنُ ۚ إِنَّ رَبَّكَ هُوَ أَعْلَمُ بِمَن ضَلَّ عَن سَبِيلِهِ ۖ وَهُوَ أَعْلَمُ بِالْمُهْتَدِينَ ﴿١٢٥﴾

(१२६) र यदि तिमी प्रतिशोध लिन्छौ पनि त बिल्कुल त्यति नै जति दुख तिमीलाई पुऱ्याइएको छ, तथा यदि धैर्य राख्दछौ भने निःसन्देह धैर्यवानहरूका लागि यही उत्तम छ ।[3]

وَإِنْ عَاقَبْتُمْ فَعَاقِبُوا بِمِثْلِ مَا عُوقِبْتُم بِهِ ۖ وَلَئِن صَبَرْتُمْ لَهُوَ خَيْرٌ لِّلصَّابِرِينَ ﴿١٢٦﴾

(१२७) तपाईं धैर्य राख्नुस् र अल्लाहको कृपा बिना तपाई धैर्य राख्नै सक्नुहुन्न तथा उनीहरूको अवस्थाबाट दुःखी नहुनुहोस् जो यो छल-कपट गर्दछ तिनीबाट संकुचित नहुनुस् ।[4]

وَاصْبِرْ وَمَا صَبْرُكَ إِلَّا بِاللَّهِ ۚ وَلَا تَحْزَنْ عَلَيْهِمْ وَلَا تَكُ فِي ضَيْقٍ مِّمَّا يَمْكُرُونَ ﴿١٢٧﴾

(१२८) विश्वास गर कि अल्लाह (तआला) परहेजगार तथा पुण्य कार्य गर्नेहरूका साथमा छ ।

إِنَّ اللَّهَ مَعَ الَّذِينَ اتَّقَوا وَّالَّذِينَ هُم مُّحْسِنُونَ ﴿١٢٨﴾

[1]यसमा धर्म-प्रचार एवं प्रसारका नियम वर्णित गरिएका छन्, जुन हिकमत, सत्य भाषण, प्रेम तथा विनम्रतामा आधारित छन् । उत्तम विवाद, तर्क-वितर्क तथा कडाई एवं कटुताबाट पन्छिदै कोमल तथा प्रेमपूर्ण भावको प्रयोग गर्नुछ ।

[2]अर्थात् तपाईंको कार्य नियमहरूका अनुसार शिक्षा-दीक्षा दिनु हो, सत्यमार्गमा हिंडाइदिनु, यो मात्र अल्लाहको अधिकारमा छ तथा त्यो जान्दछ कि मार्ग-दर्शन प्राप्त गर्ने को छ तथा को छैन ?

[3]यसमा यद्यपि बदला (प्रतिशोध) लिनुको आज्ञा छ तर अति होइन, अन्यथा यो स्वयं अत्याचार हुनेछ, तैपनि क्षमा गरिदिनु तथा धैर्यको मार्ग अपनाउनलाई अधिक श्रेष्ठ भनिएको छ ।

[4]यसकारण कि अल्लाह तआला उनीहरूका षडयन्त्रहरूको विरोधमा निष्ठावानहरू तथा अल्लाहसित भय गर्ने एवं सत्कर्मीहरूसँग छ तथा जोसँग अल्लाह छ, त्यसलाई संसारका मानिसहरूको चाल हानि पुऱ्याउन सक्दैन जस्तो कि यसभन्दा पूर्वका आयतमा छ ।

# सूरतु बनी इस्राईल-१७

سُوْرَةُ بَنِيْٓ اِسْرَآءِيْلَ

सूरः बनी इस्राईल* मक्कामा उत्रेको तथा यसका एक सय एघार आयतहरू तथा बाह्र रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाह तआलाको नामबाट प्रारम्भ गर्दछु, जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

سُبْحٰنَ الَّذِيْٓ اَسْرٰى بِعَبْدِهٖ لَيْلًا مِّنَ الْمَسْجِدِ الْحَرَامِ اِلَى الْمَسْجِدِ الْاَقْصَا

(१) पवित्र छ[1] त्यो (अल्लाह तआला) जसले आफ्नो भक्त[2] (मुहम्मद) लाई रातारात मस्जिदे हराम (प्रतिष्ठित) बाट

*यो सूरः मक्कामा अवतरित भयो । यसकारण यसलाई मक्की भन्दछन् । यस सूरःको दोस्रो नाम अल-इस्रा पनि हो, यसकारण कि यसमा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई इस्रा (रात्रिको समय मस्जिदे अक्सा लैजानु) को वर्णन छ । सहीह बुख़ारीमा वर्णित छ कि आदरणीय अब्दुल्लाह बिन मसऊद स्वयं सुनेर भन्दछन् कि सूरः कहफ़, मरियम तथा बनी इस्राईल, यी प्रथमकालीन मध्येका हुन् । (तफ़सीर सूरः बनी इस्राईल) (عتيق) को वहुवचन हो (عتاق) (प्राचीन) तथा (تلاد) पनि (تالد) को वहुवचन हो । तालिद प्राचीन धनलाई भन्दछन् । अर्थ यो हो कि तीनवटा सूरत ती प्रचीन सूरतहरू मध्येबाट हुन्, जुन मक्कामा प्रथम कालमा अवतरित भए । रसूल अल्लाह सल्लल्लाहु अलैहि वसल्लम प्रत्येक राति सूरः बनी इस्राईल तथा सूरः जुमरको पाठ गर्नुहुन्थ्यो । (मुसनद अहमद भाग ६, पृष्ठ ६८ तथा ११२, तिर्मिज़ी संख्या २९२-३४० तथा अलबानीले यसलाई सही भनेका छन् । (सहीह संख्या ६४१, भाग २)

[1](سبحان، سبح يسبح) को रूप हो । अर्थ हो (أنزه الله تنزيها) अर्थात् म अल्लाहलाई प्रत्येक दोषबाट पवित्र तथा शुद्ध मान्दछु । सामान्यरूपले यसको प्रयोग यस्ता अवसरहरूमा हुन्छ जब कुनै महान विषयको वर्णन हुन्छ । अर्थ यो हुन्छ कि मानिसहरूका निकट प्रत्यक्ष साधनको आधारमा यो घटना जतिसुकै असम्भव होस्, अल्लाहको लागि कुनै कठिन छैन । यसकारण कि त्यो कुनै साधनको लागि बाध्य छैन । त्यो त शब्द कुन (كن) बाट एकैक्षणमा जे चाहन्छ गर्नसक्छ । साधन मनुष्यका लागि हुन् । अल्लाह तआला यी बन्धनहरू तथा न्यूनताबाट पवित्र छ ।

[2](إسراء) को अर्थ हुन्छ रात्रिको समयमा लैजानु अगाडी (ليلا) (रात्रि) यसकारण वर्णन गरियो ताकि रात्रिको अल्पता स्पष्ट भइहालोस्, यसैकारण त्यो जातिवाचक संज्ञा छ । अर्थात् रात्रिको एक भाग अथवा अलिकति भागमा । अर्थात् चालीस रात्रिको यो यात्रा, पूर्ण रात्रिमा पनि होइन, बरु रात्रिको एउटा सानो भागमा पूरा भयो ।

ٱلَّذِى بَٰرَكْنَا حَوْلَهُۥ لِنُرِيَهُۥ مِنْ ءَايَٰتِنَآ ۚ إِنَّهُۥ هُوَ ٱلسَّمِيعُ ٱلْبَصِيرُ ①

अक़सा[1] सम्म लग्यो जसका निकटवर्ती क्षेत्रहरूमा हामीले बरकतहरू (विभूतिहरू) प्रदान गरेका छौं,[2] यसकारण कि हामीले त्यसलाई आफ्नो सामर्थ्यका केही प्रतीकहरू देखाऔं ।[3] निःसन्देह अल्लाह (तआ़ला) सबै राम्ररी सुन्दछ, देख्दछ ।

[1] (أقصى) टाढालाई भन्दछन् । बैतुल मक़्दिस, जुन अल-कुदस अथवा इलिया (प्राचीन नाम) नगरमा छ तथा फिलिस्तीनमा स्थित छ, मक्काबाट अल-कुदससम्मको यात्रा चालीस दिनको छ, यस आधारमा मस्जिदे हरामको तुलनामा बैतुल मक़्दिसलाई मस्जिदे अक्सा (टाढाको मस्जिद) भनिएको छ ।

[2] यो क्षेत्र प्राकृतिक नदीहरू तथा फलहरूको अधिकता तथा नबीहरूको धर्ती हो जुन उनका निवासस्थान तथा समाधिस्थल हुनुको कारण श्रेष्ठ छ, यसैले यसलाई शुभस्थली भनिएको छ ।

[3] यस यात्राको यो उद्देश्य हो ताकि हामीले आफ्नो यस विचित्रता तथा ठूला निशानीहरू देखाऔं । जसमध्ये एउटा निशानी तथा चमत्कार यो यात्रा पनि हो कि यति लामो यात्रा रात्रिको एउटा छोटो भागमा भइहाल्यो । नबी करीम सल्लल्लाहु अलैहि वसल्लमलाई जुन मेराज भयो अर्थात् आकाशहरूमा लगियो त्यहाँ विभिन्न आकाशहरूमा अम्बिया अलैहिस्सलामसित मिलन भयो तथा "सिदरतुल मुन्तहा" मा, जुन अर्शमुनि सातौं आकाशमा छ, अल्लाह तआ़लाले प्रकाशना (वह्यी) द्वारा नमाज़ तथा अन्य वस्तुहरू प्रदान गऱ्यो जसको विस्तृत वर्णन सहीह हदीसहरूमा भएको छ तथा सहाबा एवं ताबईनदेखि लिएर आजसम्म मुसलमान समुदायका सबै ज्ञानी तथा विचारक यस सबै कुरालाई मान्दै आइराखेका छन् कि यो मेराज शारीरिक रूपमा सचेत अवस्थामा भएको हो । यो स्वप्न अथवा आत्मिक यात्रा तथा दर्शन होइन, बरु प्रत्यक्ष दर्शन हो, जुन अल्लाहले आफ्नो पूर्ण सामर्थ्यले आफ्नो पैग़म्बरलाई गराएको छ । यस मेराजका दुईटा भाग छन् । प्रथम भागलाई इस्रा भनिन्छ, जसको वर्णन यहाँ गरिएको छ तथा जुन मस्जिदे हरामदेखि मस्जिदे अक्सासम्मको यात्राको नामले प्रसिद्ध छ । यहाँ पुगिसके पश्चात नबी सल्लल्लाहु अलैहि वसल्लमले सबै नबीहरूको ईमामत गर्नुभयो । बैतुल मक़्दिसबाट उहाँलाई आकाशहरूमा लगियो । यो यस यात्राको द्वितीय भाग हो, जसलाई मेराज भनिन्छ, यसको केही वर्णन सूरः नज्ममा गरिएको छ तथा शेष विस्तृत जानकारी हदीसहरूमा वर्णित गरिएको छ । सामान्य रूपले यस पूरा यात्रालाई मेराजबाट नै सम्बोधित गरिन्छ । मेराज भऱ्याङलाई भनिन्छ, यी नबी सल्लल्लाहु अलैहि वसल्लमको पवित्र मुखबाट निस्केका शब्द (عُرِجَ بِي إِلَى السَّمَاءِ) (मलाई आकाशमा उठाइयो) बाट लिइएको छ, किनकि यस यात्राको द्वितीय भाग प्रथमभन्दा अत्याधिक महत्वपूर्ण छ, यसकारण मेराज शब्द नै अधिक

وَآتَيْنَا مُوسَى الْكِتٰبَ وَجَعَلْنٰهُ هُدًى لِّبَنِيٓ إِسْرَآءِيلَ أَلَّا تَتَّخِذُوا مِن دُونِي وَكِيلًا ②

(२) तथा हामीले मुसालाई किताब प्रदान गऱ्यौं तथा त्यसलाई इस्राईलका सन्तानका लागि मार्ग-दर्शन बनायौं कि तिमी म बाहेक अन्य कसैलाई कार्यसाधक नठहराऔ ।

ذُرِّيَّةَ مَنْ حَمَلْنَا مَعَ نُوحٍ إِنَّهُ كَانَ عَبْدًا شَكُورًا ③

(३) हे उनका सन्तान, जसलाई हामीले नूहका साथ (नौंकामा) सवार गरेका थियौं, त्यो हाम्रो अत्याधिक कृतज्ञ भक्त थियो ।[1]

وَقَضَيْنَآ إِلَىٰ بَنِيٓ إِسْرَآءِيلَ فِي الْكِتٰبِ لَتُفْسِدُنَّ فِي الْأَرْضِ مَرَّتَيْنِ وَلَتَعْلُنَّ عُلُوًّا كَبِيرًا ④

(४) तथा हामीले इस्राईलका सन्तानका लागि उनको किताबमा स्पष्ट निर्णय गरिदिएका थियौं कि तिमीले धर्तीमा दुईपटक उपद्रव उत्पन्न गर्नेछौ तथा तिमी अत्याधिक अत्याचार गर्नेछौ ।

فَإِذَا جَآءَ وَعْدُ أُولٰىهُمَا بَعَثْنَا عَلَيْكُمْ عِبَادًا لَّنَآ أُولِي بَأْسٍ شَدِيدٍ فَجَاسُوا

(५) यी दुबै वचनहरूमध्ये प्रथम आउनासाथै हामीले तिम्रा समक्ष आफ्ना भक्तहरूलाई उभ्यायौं, जो बडो शक्तिशाली योद्धा थिए । अनि उनी तिम्रा

शव्द नै अधिक प्रसिद्ध भयो । यसको तिथिमा मतभेद छ, तैपनि यसमा सहमति छ कि हिजरत भन्दा पहिलाको घटना हो । केही विद्वानहरू भन्छन् कि एक वर्ष पूर्वको तथा केही भन्दछन् कैयन् वर्ष पूर्व यो घटना घटित भयो । यसैप्रकार महिना तथा तिथिमा पनि मतभेद छ कोही रबीउल अव्वल १७ अथवा २७, कोही रजबको २७ तथा कोही अन्य मास तथा तिथि बताउँछन् । नूहको समयको तूफान (जलप्रलय) को पश्चात मनुष्यको वंश नूहका ती पुत्रहरूका वंशबाट छ, जो नूहको डुंगामा सवार भएका थिए तथा तूफानबाट बाँचेका थिए । यसकारण इस्राईलका सन्तानलाई सम्बोधित गर्दै भनियो कि तिम्रो पिता अल्लाहको अति कृतज्ञ भक्त थियो । तिमी पनि आफ्नो पिता सरह कृतज्ञताको मार्ग अपनाउ तथा हामीले जुन मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई रसूल बनाएर पठाएका छौं, उनलाई अस्वीकार गरी कृतघ्नता नगर ।

خِلٰلَ الدِّيَارِ ۭ وَكَانَ وَعْدًا مَّفْعُوْلًا ۝

वस्तीहरूमा पसेर चारैतिर फैलिए । र अल्लाहको वचन पूरा हुनु नै थियो ।[1]

ثُمَّ رَدَدْنَا لَكُمُ الْكَرَّةَ عَلَيْهِمْ وَاَمْدَدْنٰكُمْ بِاَمْوَالٍ وَّبَنِيْنَ وَجَعَلْنٰكُمْ اَكْثَرَ نَفِيْرًا ۝

(६) त्यस पश्चात हामीले उनीहरूमाथि तिम्रो प्रभाव दिएर (तिम्रा दिन) फर्काइदियौं तथा धन एवं सन्तानले तिम्रो सहायता गऱ्यौं तथा तिमीलाई बहुसंख्यक जत्था भएको (मानव-शक्ति) गरिदियौं ।[2]

اِنْ اَحْسَنْتُمْ اَحْسَنْتُمْ لِاَنْفُسِكُمْ ۣ وَاِنْ اَسَاْتُمْ فَلَهَا ۭ فَاِذَا جَاۗءَ وَعْدُ الْاٰخِرَةِ لِيَسُوْۗءٗا وُجُوْهَكُمْ وَلِيَدْخُلُوا الْمَسْجِدَ كَمَا دَخَلُوْهُ اَوَّلَ مَرَّةٍ وَّلِيُتَبِّرُوْا مَا عَلَوْا تَتْبِيْرًا ۝

(७) यदि तिमीले राम्रो काम गऱ्यौ भने स्वयं आफ्नो लाभको लागि तथा यदि तिमीले नराम्रा कर्म गऱ्यौ भने स्वयं आफ्नो लागि नै, अनि जब दोस्रो वादा (वचन) आयो त (हामीले अर्का भक्तहरूलाई पठायौं) ताकि उनीहरू तिम्रा मुहार बिगारिदेऊन् तथा प्रथम पटकमा भए जस्तै फेरि त्यसै मस्जिदमा पसिहालून्। तथा जुन-जुन कुरामाथि अधिकार पाउँछन्, तोडफोड गरी जराबाट उखेलिदेऊन्।[3]

[1]यो संकेत त्यस अपमान तथा नाशतिर छ, जुन वावुलको राजाधिराज वोख़्त नस्सरद्वारा आदरणीय मसीहभन्दा लगभग ६ सय वर्ष पूर्व यहूदीहरूमाथि योरूशलममा घटित भयो। उसले निःसंकोच यहूदीहरूको नरसंहार गऱ्यो तथा एउटा ठूलो संख्यालाई दास वनायो तथा यो त्यस समय भयो जव उनीहरूले अल्लाहका नबी आदरणीय शअयाको हत्या तथा आदरणीय अरमिया अलैहिस्सलामलाई वन्दी बनाए तथा तौरातका आदेशहरूको उल्लघंन गरे तथा पाप गरेर धर्तीमा आतङ्क मच्चाई अपराधी वने। केही विद्वानहरू भन्दछन् कि वोख़्त नस्सरको सट्टा जालूतलाई अल्लाह तआलाले दण्डस्वरुप उनीहरूको लागि पठायो, जसले उनीमाथि अत्याचार तथा क्रुरताका व्यवहार गरे यहाँसम्मकि तालूतको नेतृत्वमा आदरणीय दाऊदले जालूतलाई वध गरे।

[2]अर्थात् वोख़्त नस्सर अथवा जालूतको वध पश्चात हामीले तिमीलाई पुनः धन-धान्य, पुत्रहरू तथा सम्मानवाट अलंकृत गऱ्यौं, जबकि यी सारा कुराहरू तिमीबाट खोसिसकिएका थिए। तथा तिमीलाई पुनः अधिक जनसंख्या भएका तथा शक्तिशाली बनायौं।

[3]यो दोस्रो पटक उनीहरूले उपद्रव उत्पन्न गरे कि आदरणीय ज़करियाको हत्या गरिदिए तथा आदरणीय ईसाको हत्या गर्न योजना बनाउँदै रहे, जसलाई अल्लाह तआलाले जीवित, आकाशमा उचालेर उनीहरूबाट बचाइहाल्यो । यसको परिणामस्वरुप पुनः रोमको राजा टाईटसलाई अल्लाहले उनीमाथि प्रभुत्व दियो,

(८) आशा छ कि तिम्रो प्रभुले तिमीमाथि दया गरोस् । तर हो, यदि तिमी फेरि पनि त्यही गर्न थाल्यौ भने हामीले पनि पुनः यस्तै गर्नेछौं ।[1] तथा हामीले नकार्नेहरूका लागि बन्दीगृह नरकलाई बनाएका छौं ।[2]

عَسٰى رَبُّكُمْ اَنْ يَّرْحَمَكُمْ ۚ وَاِنْ عُدْتُّمْ عُدْنَا ۘ وَجَعَلْنَا جَهَنَّمَ لِلْكٰفِرِيْنَ حَصِيْرًا ۝٨

(९) निःसन्देह यो कुर्आन त्यो मार्ग देखाउँछ, जुन सबभन्दा सोझो छ तथा ईमान्दार पुनीतहरूलाई, जो पुण्यका काम गर्दछन्, यस कुराको शुभ-सूचना दिन्छ कि उनका लागि अति उत्तम प्रतिफल छ ।

اِنَّ هٰذَا الْقُرْاٰنَ يَهْدِيْ لِلَّتِيْ هِيَ اَقْوَمُ وَيُبَشِّرُ الْمُؤْمِنِيْنَ الَّذِيْنَ يَعْمَلُوْنَ الصّٰلِحٰتِ اَنَّ لَهُمْ اَجْرًا كَبِيْرًا ۝٩

(१०) तथा तिनीहरू जो आख़िरतमा (परलोक) विश्वास गर्दैनन्, उनका लागि हामीले दुखद यातना तयार गरेका छौं ।

وَّاَنَّ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ اَعْتَدْنَا لَهُمْ عَذَابًا اَلِيْمًا ۝١٠

उसले योरूशलममाथि आक्रमण गरेर उनलाई धेरै संख्यामा वध गरेर उनका काटिएका शरीरवाट पर्खाल वनाइदियो तथा धेरै संख्यामा मानिसहरूलाई वन्दी वनायो, उनको माल लुट्यो, धार्मिक पुस्तकहरूलाई खुट्टामुनि कुल्चियो तथा वैतुल मक़दीस तथा सुलैमानका धर्मस्थानलाई खसालिदियो, उनीहरूलाई सधैंको लागि वैतुल मक़दीसवाट देश निकाला गरिदियो । तथा यसप्रकार उनको अपमान तथा अनादरका अन्य साधन उत्पन्न गरे । यो विनाश सत्तरी ईस्वीमा उनीमाथि आयो ।

[1]यो उनीहरूलाई चेतावनी दिइयो कि यदि तिमीले सुधार गऱ्यौ भने अल्लाहको कृपाको पात्र वन्नेछौ जसको अर्थ यस लोक तथा परलोकमा सम्मान तथा सफलता छ, तथा यदि फेरि अल्लाहको कृतघ्नताको मार्ग अपनाएर धर्तीमा उपद्रव उत्पन्न गऱ्यौ भने त फेरि तिमीलाई त्यसैप्रकार अपमान तथा तिरस्कारका पात्र वनाइने छ जस्तो यसभन्दा पहिला दुईपटक हामीले तिमीहरूसँग यस्ता व्यवहार गरिसकेका छौं । अतः यस्तै नै भयो, यी यहूदी आफ्ना व्यवहारलाई बदल्न सकेनन् तथा त्यही व्यवहार मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालतसँग दोहोऱ्याए जुन मुसा तथा ईसाको रिसालतसँग गरिसकेका थिए, जसका कारण ती यहूदीहरू तेस्रो पटक मुसलमानहरूवाट अपमानित भए तथा अनादरका साथ उनीहरूलाई मदीना तथा ख़ैवरवाट निकाल्नु पऱ्यो ।

[2]अर्थात् यस संसारको अपमानको पश्चात परलोकमा नरकको दण्ड तथा त्यसका यातना अतिरिक्त छ, जुन उनीहरूले त्यहाँ भोग्नु पर्नेछ ।

وَيَدْعُ الْإِنسَانُ بِالشَّرِّ دُعَاءَهُ بِالْخَيْرِ ۖ وَكَانَ الْإِنسَانُ عَجُولًا ⑪

(११) तथा मनुष्य नराम्रोका प्रार्थनाहरू गर्न थाल्दछ, पूर्णतः त्यसको आफ्नो राम्रोका लागि प्रार्थनाहरू समान, मनुष्य साह्रै नै उत्ताउलो छ ।[1]

وَجَعَلْنَا اللَّيْلَ وَالنَّهَارَ آيَتَيْنِ ۖ فَمَحَوْنَا آيَةَ اللَّيْلِ وَجَعَلْنَا آيَةَ النَّهَارِ مُبْصِرَةً لِّتَبْتَغُوا فَضْلًا مِّن رَّبِّكُمْ وَلِتَعْلَمُوا عَدَدَ السِّنِينَ وَالْحِسَابَ ۚ وَكُلَّ شَيْءٍ فَصَّلْنَاهُ تَفْصِيلًا ⑫

(१२) तथा हामीले रात तथा दिनलाई (आफ्नो सामर्थ्यका) लक्षण बनाएका छौं, रात्रिको प्रतीकलाई हामीले प्रकाशहीन गरिदियौं तथा दिनको निशानीलाई प्रकाशमान देखाउने बनायौं ताकि तिमी आफ्नो प्रभुको कृपाको खोजी गर्नसक तथा यसकारण पनि कि वर्षहरूको गणना तथा हिसाब जान्न सक[2] तथा प्रत्येक विषयलाई हामीले सविस्तार वर्णन गरिदिएका छौं ।[3]

[1]किनभने मनुष्य उत्ताउलो तथा निरूत्साही छ, यसकारण जब उसलाई दुःख पुग्दछ त आफ्नो विनाशको कामना यसप्रकार गर्दछ, जुनप्रकार सुखको निम्ति आफ्नो प्रभुसित प्रार्थना गर्दछ। यो त प्रभुको कृपा तथा दया हो कि त्यसको श्रापलाई स्वीकार गर्दैन । यही विषय सूरः यूनुस आयत ११ मा आइसकेको छ ।

[2]अर्थात् रात्रिलाई प्रकाशहीन अर्थात् अन्धकारमय गरिदियो ताकि तिमी विश्राम गर्न सक तथा तिम्रो दिनभरिको थकाई मेटियोस् तथा दिनलाई प्रकाश प्रदान गऱ्यो ताकि तिमी जीविका आर्जनको लागि आफ्नो प्रभुको कृपाको खोजी गर । यसका अतिरिक्त रात्रि-दिनको एउटा अन्य लाभ यो हो कि यसप्रकार सप्ताह, महिना तथा वर्षहरूको गणना तिमी गर्न सक, यस गणनाको असंख्य लाभ छन् । यदि राती पश्चात दिन तथा दिन पश्चात राती आउँदैनथ्यो भने सधैं रात्रि नै रहन्थ्यो अथवा दिन नै रहन्थ्यो त तिमीलाई विश्राम तथा शान्ति एवं व्यवसायको अवसर प्राप्त हुँदैनथ्यो तथा यसैप्रकार महिना तथा वर्षहरूको गणना पनि असम्भव रहन्थ्यो ।

[3]अर्थात् मनुष्यको लागि धर्म तथा संसारका आवश्यक कुरा स्पष्ट वर्णन गरिदिएको छ ताकि त्यसबाट मनुष्य लाभ प्राप्त गरून्, आफ्नो सांसारिक जीवनलाई सुखमय पारून् तथा आखिरतको पनि चिन्ता तथा त्यसका लागि तयारी गरून् ।

وَكُلَّ إِنسَانٍ أَلْزَمْنَاهُ طَائِرَهُ فِي عُنُقِهِ ۖ وَنُخْرِجُ لَهُ يَوْمَ الْقِيَامَةِ كِتَابًا يَلْقَاهُ مَنشُورًا ﴿١٣﴾

(१३) तथा हामीले प्रत्येक मनुष्यको सगुन-अपसगुन त्यसको घांटीमा बाँधिदिएका छौं तथा प्रलयका दिन हामीले त्यसको कर्मपत्रलाई निकाल्नेछौं जसलाई उसले खुल्ला रुपमा पाउनेछ।[1]

اقْرَأْ كِتَابَكَ كَفَىٰ بِنَفْسِكَ الْيَوْمَ عَلَيْكَ حَسِيبًا ﴿١٤﴾

(१४) (उसलाई भनिने छ) स्वयं नै आफ्नो कर्मपत्र (किताब) पढिहाल। आज त तिमी स्वयं नै आफ्नो हिसाब लिन पर्याप्त छौ।

مَّنِ اهْتَدَىٰ فَإِنَّمَا يَهْتَدِي لِنَفْسِهِ ۖ وَمَن ضَلَّ فَإِنَّمَا يَضِلُّ عَلَيْهَا ۚ وَلَا تَزِرُ وَازِرَةٌ وِزْرَ أُخْرَىٰ ۗ وَمَا كُنَّا مُعَذِّبِينَ حَتَّىٰ نَبْعَثَ رَسُولًا ﴿١٥﴾

(१५) जो सीधा मार्ग प्राप्त गर्दछ, त्यो स्वयं आफ्नो भलोको निम्ति मार्ग प्राप्त गर्दछ तथा जो पथ-भ्रष्ट हुन्छ, त्यसको बोझ त्यसैमाथि छ, कोही बोझ भएको कुनै अन्यको बोझ आफूमाथि बोक्ने छैन।[2] तथा हाम्रो नियम नै छैन कि रसूल पठाउनुभन्दा पूर्व नै प्रकोप पठाऔं।[3]

---

[1](طائر) (तायेर) को अर्थ पंक्षी हो तथा (عُنق) (उन्क) को अर्थ गर्दन हो। इमाम इब्ने कसीरले तायेरसित तात्पर्य मनुष्यको कर्म लिएका छन्। (في عنقه) को अर्थ हो, त्यसका राम्रा अथवा नराम्रा कर्म जसको लागि उसलाई राम्रो अथवा नराम्रो फल दिइनेछ, घाँटीको हार जस्तै उनका साथ रहनेछन्। अर्थात् उसको प्रत्येक कर्म लेखिंदैछ। अल्लाहकहाँ त्यसको पूरा लेखा सुरक्षित रहनेछ। केयामतका दिन त्यसको आधारमा निर्णय दिइनेछ। तथा इमाम शौकानीले तायेरसित तात्पर्य मनुष्यको भाग्य लिएका छन्, जसलाई अल्लाहले आफ्नो ज्ञान अनुसार लेखिदिएको छ, जसलाई सौभाग्यशाली तथा अल्लाहको अवज्ञाकारी हुनु थियो, त्यो पनि उसको ज्ञानमा थियो, यही भाग्य (सौभाग्य अथवा दूर्भाग्य) प्रत्येक मनुष्यको साथ घाँटीको हार जस्तै लगाइएको छ। त्यसै अनुरुप त्यसका कर्म हुनेछन् तथा केयामतका दिन त्यसै अनुसार निर्णय हुनेछ।

[2]हो जो विचलित भए तथा विचलित गर्नेहरू पनि हुनेछन्, उनीहरूले आफ्नो विचलनको बोझका साथ उनीहरूका पापको पनि बोझ (उनको पापमा कमी नगरिकन) उठाउनु पर्नेछ, जो उनका प्रयत्नहरूबाट विचलित भएका हुनेछन्। जस्तो कि कुरआनका अन्य स्थानहरू तथा हदीसहरूबाट स्पष्ट छ। यो वास्तवमा उनकै पापहरूको भार हुनेछ, जुन अरुहरूलाई विचलित गरेर उनीहरूले कमाए।

[3]केही व्याख्याकारहरूले यसबाट मात्र सांसारिक यातनाको भावार्थ लिएका छन्, अर्थात आख़िरतको यातनाबाट बच्न सक्नेछैन। तर कुरआन करीमका अन्य स्थानहरूबाट स्पष्ट छ कि अल्लाह तआला मानिसहरूसित सोध्नेछ कि के तिम्रो पासमा रसूल आएका थिएनन्? जसको उनीहरूले सकारात्मक उत्तर दिनेछन्, जसबाट

وَإِذَآ أَرَدۡنَآ أَن نُّهۡلِكَ قَرۡيَةً أَمَرۡنَا مُتۡرَفِيهَا فَفَسَقُواْ فِيهَا فَحَقَّ عَلَيۡهَا ٱلۡقَوۡلُ فَدَمَّرۡنَٰهَا تَدۡمِيرٗا ١٦

(१६) तथा जब हामीले कुनै वस्तीको विनाशको इच्छा गर्दछौं, त्यहाँका सम्पन्न मानिसहरूलाई त केही आदेश दिन्छौं तथा उनीहरू त्यस वस्तीमा स्पष्टरूपले अवहेलना गर्न थाल्छन्, तब उनीमाथि प्रकोप निर्णय लागू हुन्छ । तथा त्यस पश्चात हामीले त्यसलाई सखाप (उलट-पलट) पारिदिन्छौं ।[1]

وَكَمۡ أَهۡلَكۡنَا مِنَ ٱلۡقُرُونِ مِنۢ بَعۡدِ نُوحٖۗ وَكَفَىٰ بِرَبِّكَ بِذُنُوبِ عِبَادِهِۦ

(१७) तथा हामीले नूह पश्चात पनि धेरै समुदाय नष्ट गऱ्यौं ।[2] तथा तिम्रो प्रभु आफ्ना

यो प्रतीत हुन्छ कि रसूलहरूलाई पठाउनु तथा धर्मशास्त्र अवतरण नगरिकन त्यसले कसैलाई प्रकोप दिने छैन, फेरि पनि यसको निर्णय कि कुन समुदाय अथवा कुन व्यक्तिसम्म त्यसको सन्देश पुगेन, क़ियामतका दिन त्यसले स्वयं नै गर्नेछ । त्यहाँ निःसन्देह कसैमाथि अत्याचार हुनेछैन । यसैप्रकार बहिरा, पागल, बुद्धिहीन तथा अज्ञानकालका मृत मानिसहरूको समस्या छ, तिनका विषयमा केही कथनहरूमा चर्चा आउँछ कि क़ियामतका दिन अल्लाह तआला उनीतिर फरिश्ताहरू पठाउनेछ तथा तिनीहरूसँग भन्नेछन् कि नरकमा जाऊ, यदि तिनीहरू अल्लाहको यस आदेशलाई मानेर नरकमा प्रवेश गर्नेछन् भने नरक तिनीहरूको लागि फुलहरूको शैय्या बन्नेछ । दोस्रो अवस्थामा उनीहरूलाई घिसार्दै नरकमा हालिनेछ । (मुसनद अहमद भाग-४ पृष्ठ-२४ तथा इब्ने हिब्बान भाग-९ पृष्ठ २२६ अल्लामा अलवानीले सहीहुल जामे अस्सगीर संख्या ८८१ मा यसको वर्णन गरेका छन् ।) मुसलमानहरूका वच्चाहरू त स्वर्गमा जानेछन् परन्तु काफ़िरहरूका साना वच्चाहरूको विषयमा मतभेद छ, कोही विलम्वलाई, कोही स्वर्गमा जाने, तथा कोही नर्कमा जाने कुरोलाई मान्दछन् । इमाम इब्ने कसीरले भनेका छन् हश्रको मैदानमा उनको परीक्षा लिइनेछ, उनले यसै कथनलाई प्राथमिकता दिएका छन् तथा भनेका छन् कि यसवाट विरोधी कथनको खण्डन पनि हुन्छ । (विस्तारको लागि तफ़सीर इब्ने क़सीर हेर्नुस्) तर सहीह बुख़ारीको कथनवाट ज्ञात हुन्छ कि मूर्तिपूजकका बच्चाहरू पनि स्वर्गमा जानेछन् । (सहीह बुख़ारी ३:२५१, १२: ३४८)

[1]यसमा यस्ता नियम वर्णित गरिएका छन्, जसको आधारमा समुदायहरूको विनाशको निर्णय गरिन्छ, तथा त्यो यो हो कि उनका धनाड्य समाज अल्लाहका आदेशहरूको अवहलेना प्रारम्भ गरिदिन्छ । तथा उनैको अनुकरण फेरि अन्य मानिसहरू गर्दछन्, यसप्रकार त्यस समुदायमा अल्लाहको अवहेलना सामान्य हुनजान्छ तथा उनी यातनाका अधिकारी घोषित गरिन्छन् ।

[2]उनीहरू पनि यसै विनाशका नियमानुसार नष्ट भए ।

خَبِيرًۢا بَصِيرًا ⑰

भक्तहरूका पापसित राम्ररी परिचित छ एवं राम्रोसँग देख्दछ ।

مَّن كَانَ يُرِيدُ ٱلْعَاجِلَةَ عَجَّلْنَا لَهُۥ فِيهَا مَا نَشَآءُ لِمَن نُّرِيدُ ثُمَّ جَعَلْنَا لَهُۥ جَهَنَّمَ يَصْلَىٰهَا مَذْمُومًا مَّدْحُورًا ⑱

(१८) जसको इच्छा केवल यस शीघ्रता भएको संसारकै छ, उसलाई हामीले यहाँ जति जसको लागि चाहन्छौ शीघ्रताले प्रदान गरिदिन्छौं । अन्त्यमा त्यसको लागि हामीले नरक निर्धारित गरिदिन्छौं जहाँ त्यसले निन्दित धिक्कृत भई प्रवेश गर्नेछ ।[1]

وَمَنْ أَرَادَ ٱلْـَٔاخِرَةَ وَسَعَىٰ لَهَا سَعْيَهَا وَهُوَ مُؤْمِنٌ فَأُو۟لَـٰٓئِكَ كَانَ سَعْيُهُم مَّشْكُورًا ⑲

(१९) तथा जसको इच्छा परलोकको छ तथा जस्तो प्रयत्न हुनुपर्छ त्यसतो त्यसले गर्दछ पनि तथा त्यो ईमान भएको पनि छ र ईमानका यिनै मानिसहरू हुन्, जसका प्रयत्नलाई अल्लाहकहाँ पूरा सम्मान गरिनेछ ।[2]

كُلًّا نُّمِدُّ هَـٰٓؤُلَآءِ وَهَـٰٓؤُلَآءِ مِنْ عَطَآءِ رَبِّكَ ۚ وَمَا كَانَ عَطَآءُ رَبِّكَ مَحْظُورًا ⑳

(२०) प्रत्येकलाई हामी दिन्छौं, यिनीहरूलाई पनि उनीहरूलाई पनि तेरो प्रभूको उपकारबाट, तेरो पालनहारको उपकार रोकिएको छैन ।[3]

[1]अर्थात् प्रत्येक संसारको लोभीलाई संसार प्राप्त हुँदैन, केवल उसले पाउँछ, जसलाई हामी चाहन्छौं, अनि उसलाई पनि संसार त्यति नै प्राप्त हुन्छ जति कि त्यो कामना गर्दछ, बरु त्यति नै प्राप्त हुन्छ, जति हामी उसको लागि निर्णय गर्दछौं तथा यस मार्गमोहको परिणाम नरकको स्थाई यातना तथा उसको अपमान हो ।

[2]अल्लाह तआला कहाँ सम्मानका लागि तीन कुराहरूको वर्णन गरिएको छ । १-परलोकको चिन्ता अर्थात् शुद्धता तथा अल्लाहको प्रसन्नता । २-यस्तो प्रयत्न जुन उसको योग्य छ अर्थात् सुन्नतका अनुसार । ३-ईमान, किनभने यसबिना कुनै पनि कर्म ध्येय छैन अर्थात् कर्मको स्वीकृतिका लागि ईमानका साथ शुद्धता (एकेश्वरबाद) तथा सुन्नते नबवी सल्लल्लाहु अलैहि वसल्लमको अनुसार हुनु आवश्यक छ ।

[3]अर्थात् संसारको जीविका तथा सुख-सुविधा कुनै अन्तर बिना मुसलमान तथा काफ़िर, संसारको कामना गर्ने तथा परलोकको चिन्ता गर्नेहरू सबैलाई दिन्छौं । अल्लाहको उपकार कसैबाट पनि रोकिँदैन ।

انْظُرْ كَيْفَ فَضَّلْنَا بَعْضَهُمْ عَلٰى بَعْضٍ ۚ وَلَلْاٰخِرَةُ اَكْبَرُ دَرَجٰتٍ وَّاَكْبَرُ تَفْضِيْلًا ﴿٢١﴾

(२१) हेर, उनीहरूमध्ये एकलाई अर्कामथि कुन प्रकारले विशेषता प्रदान गरेका छौं तथा परलोक (आख़िरत) त पदहरूका अनुसार अति उत्तम छ तथा सम्मानका अनुसार पनि अति उत्तम छ ।[1]

لَا تَجْعَلْ مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ فَتَقْعُدَ مَذْمُوْمًا مَّخْذُوْلًا ﴿٢٢﴾

(२२) अल्लाहका साथ अन्य कसैलाई पूजा नगर अन्यथा अन्तत: तिमी निन्दित नि:सहाय भई बस्नेछौ ।

وَقَضٰى رَبُّكَ اَلَّا تَعْبُدُوْٓا اِلَّآ اِيَّاهُ وَبِالْوَالِدَيْنِ اِحْسَانًا ۚ اِمَّا يَبْلُغَنَّ عِنْدَكَ الْكِبَرَ اَحَدُهُمَآ اَوْ كِلٰهُمَا فَلَا تَقُلْ لَّهُمَآ اُفٍّ وَّلَا تَنْهَرْهُمَا وَقُلْ لَّهُمَا قَوْلًا كَرِيْمًا ﴿٢٣﴾

(२३) तथा तिम्रो प्रभुले स्पष्ट आदेश दिइसकेको छ कि तिमी त्यसको अतिरिक्त कुनै अन्यको आराधना (इबादत) नगर्नु तथा माता-पिता सँग उपकार गर्नु । यदि तिम्रो उपस्थितिमा यिनीहरूमध्ये एउटा अथवा यी दुवै बृद्धा अवस्थामा पुग्छन्, त उनलाई 'ऊफ' सम्म नभन्नू, उनीहरूलाई गाली नगर्नु, बरु उनीसित सम्मान तथा आदरले कुरा गर्नू ।[2]

[1]तैपनि संसारका यी वस्तुहरू कसैलाई कम, कसैलाई अधिक प्राप्त हुन्छ, अल्लाह तआ़ला आफ्नो इच्छा एवं ज्ञान अनुसार यो जीविका विभाजित गर्दछ । तर आख़िरतमा श्रेणीहरूको यो अन्तर धेरै स्पष्ट एवं प्रत्यक्ष हुनेछ तथा त्यो यसप्रकार कि ईमान भएका स्वर्गमा तथा काफ़िरहरू नरकमा जानेछन् ।

[2]यस आयतमा महाकृपालु अल्लाह तआ़लाले आफ्नो इबादतका पश्चात दोस्रो चरणमा माता-पिताका साथ सद्व्यवहारको आदेश दिएको छ, जसबाट माता-पिताको आज्ञापालन, उनको सेवा तथा उनको आदर-सत्कारको महत्व स्पष्ट हुन्छ, महापालनकर्ता अल्लाहको प्रतिपालनको माग पूरा गर्नुका साथ साना-पोषक माता-पिताको आज्ञा पालनको मागलाई पनि पूरा गर्नुछ । हदीसहरूमा दर्शाइएको छ, अनि बृद्धा अवस्थामा विशेषरूपले उनका समक्ष 'उफ़' शब्द सम्म भन्नुबाट रोकिएको छ तथा उनलाई गाली गर्नुबाट मनाही गरिएको छ, किनभने बृद्धा अवस्थामा माता-पिता कमजोर, असहाय तथा लाचार हुन्छन्, जबकि सन्तान ज़वान, तथा जीविका साधनमाथि अधिकृत हुन्छ । यसको अतिरिक्त वयस्क एवं जवानी अवस्थाको भावना एंवं बृद्धा अवस्थाको दुखीं अनुभवको

(२४) तथा नम्रता एवं प्रेमसँग उनका सामु सत्कारको हात फैलाइराख्नु[1] तथा प्रार्थना गर्दैरहनु कि हे मेरो प्रभु ! यिनीहरूमाथि त्यस्तै दया गर्नु, जस्तो कि यिनीहरूले मेरो बाल्यकालमा मेरो पालन-पोषण गरेका छन् ।

وَاخْفِضْ لَهُمَا جَنَاحَ الذُّلِّ مِنَ الرَّحْمَةِ وَقُل رَّبِّ ارْحَمْهُمَا كَمَا رَبَّيَانِي صَغِيرًا ﴿٢٤﴾

(२५) जे-जति तिम्रा हृदयमा छन्, त्यसलाई तिम्रो प्रभु राम्ररी जान्दछ, यदि तिमी सदाचारी छौ भने त्यो क्षमा-याचना गर्नेहरूका लागि क्षमाशील छ ।

رَّبُّكُمْ أَعْلَمُ بِمَا فِي نُفُوسِكُمْ ۚ إِن تَكُونُوا صَالِحِينَ فَإِنَّهُ كَانَ لِلْأَوَّابِينَ غَفُورًا ﴿٢٥﴾

(२६) तथा सम्बन्धिहरूको, निर्धनहरूको एवं यात्रीहरूको अधिकार दिँदैरह ।[2] तथा अनर्थ र अपव्ययबाट बच ।

وَآتِ ذَا الْقُرْبَىٰ حَقَّهُ وَالْمِسْكِينَ وَابْنَ السَّبِيلِ وَلَا تُبَذِّرْ تَبْذِيرًا ﴿٢٦﴾

आपसमा मुठभेड (भिडन्त) हुन्छ, यी परिस्थितिहरूमा माता-पिता आदर-सत्कारका नियमहरूमा ध्यान दिनु अत्याधिक कठिन विषय हुन्छ । तैपनि अल्लाहको दरवारमा सम्मानित एवं सफल त्यही हुनेछ, जसले यी नियमहरूको पालन गर्नेछ ।

[1]पंक्षी जव आफ्नो बच्चाहरूलाई आफ्नो प्रेम छायाँमा लिन्छ, त उनका लागि आफ्ना पखेटा तल झरालदिन्छ अर्थात् तिमी पनि आफ्ना माता-पितासँग यसैप्रकार राम्रो एवं प्रेमपूर्ण व्यवहार गर तथा उनको यसप्रकार पालनपोषण गर, जुनप्रकार उनीहरूले बाल्यवस्थामा तिमीलाई गरे अथवा यो अर्थ हो कि जब पंक्षी उड्नु अथवा माथि उड्न प्रयत्न गर्दछ, त आफ्नो पखेटा फैलाउँछ तथा जब वर्लन्छ त पखेटालाई तल गरिहाल्छ । यस आधारमा हात तल गर्नुको माता-पिताका समक्ष सत्कार तथा नम्रता व्यक्त गर्नुहुनेछ ।

[2]कुर्आन करीमका यी शव्दहरूबाट ज्ञात भयो कि निर्धन निकट सम्बन्धिहरू, निर्धनहरू तथा कुनै प्रकारका आवश्यकता भएका यात्रीहरूको सहायता गरी उनीमाथि उपकार जताउनु हुँदैन किनभने यो उपकार होइन बरु मालको त्यो भाग हो, जुन अल्लाह तआलाले धनवानहरूको धनमा वर्णित व्यक्तिहरूको लागि राखेको छ । यदि धनवानले यो धन तिर्ने छैन भने अल्लाहको सामु अपराधी हुनेछ । अर्थात् यो अधिकारलाई दिनु हो, न कि कसैमाथि उपकार । यसको अतिरिक्त निकट सम्बन्धिहरूको वर्णन गर्नुबाट उनको प्राथमिकता एवं

(२७) अपव्यय गर्ने शैतानहरूका भाई हुन् तथा शैतान आफ्नो प्रभुको अत्याधिक कृतघ्न छ ।[१]

إِنَّ الْمُبَذِّرِينَ كَانُوٓا إِخْوَانَ الشَّيَٰطِينِ ۖ وَكَانَ الشَّيْطَٰنُ لِرَبِّهِۦ كَفُورًا ﴿٢٧﴾

(२८) तथा यदि तिमीलाई आफ्नो पालनकर्ताको दयालुताको खोजीमा जसको तिमी आशा राख्दछौ, उनीहरूबाट मुख फर्काउन परेपनि तिमी राम्ररी तथा कोमलताले उनीहरूलाई बुझाइदेउ ।[२]

وَإِمَّا تُعْرِضَنَّ عَنْهُمُ ابْتِغَآءَ رَحْمَةٍ مِّن رَّبِّكَ تَرْجُوهَا فَقُل لَّهُمْ قَوْلًا مَّيْسُورًا ﴿٢٨﴾

(२९) तथा आफ्ना हात आफ्नो गर्दनसित बाँधिएको नराख तथा न त्यसलाई पूर्णरूपले खुल्ला छाडिदेउ ।

وَلَا تَجْعَلْ يَدَكَ مَغْلُولَةً إِلَىٰ عُنُقِكَ وَلَا تَبْسُطْهَا كُلَّ الْبَسْطِ

अधिकार पनि स्पष्ट हुन्छ । निकट सम्बन्धिहरूका अधिकारलाई पूरा गर्न तथा उनका साथ सद्व्यवहार गर्नलाई सम्बन्ध जोड्नु भनिन्छ, जसको इस्लाममा बडो महत्व छ ।

[१](تَبْذِيرٌ) का मूल धातु (बीउ छर्नु) (بَذْرٌ) हो जुनप्रकारले खेतमा विउ छर्दाखेरि यो देखिदैन कि यो उचित स्थानमा परिराखेको छ अथवा त्यसबाट यताउता, वरु किसान विउ छर्दै जान्छ। (تَبْذِيرٌ) (अपव्यय) पनि यही हो कि मानिस आफ्नो धन विउको जस्तै उडाउँदै गरोस् तथा व्यय गर्नुमा धार्मिक नियमहरूको उल्लघंन पनि गरोस्, तथा केही विद्वानहरू भन्दछन् कि 'तवज़ीर' को अर्थ हो अनुचित ठाउँमा खर्च गर्नु चाहे त्यो थोरै किन नहोस् । हाम्रो विचारमा दुवै कुरा 'तबज़ीर' मा आउँछन् तथा यो यति नराम्रो कर्म हो कि यो गर्नेहरूलाई शैतान समान भनिएको छ तथा शैतानको अनुरूपतावाट वच्नुपर्छ, चाहे त्यो कुनै एउटै प्रकारको होस्, मनुष्यको लागि बच्नु आवश्यक छ। अनि शैतानलाई (كَفُورٌ) (अत्याधिक कृतघ्न) भनेर अझै अधिक बच्नुमा जोड दिइएको छ कि यदि तिमी शैतानको अनुरूप क्रियाकलाप गर्नेछौ भने तिमी पनि त्यसै सरह كَفُورٌ घोषित गरिनेछौ । (फ़तहुल क़दीर)

[२]अर्थात् धनको शक्तिको कमीको कारण, जसको समाप्तिको हुनुको तथा जीविकामा बृद्धिको तिमी आफ्नो प्रभुसित आशा राख्दछौ । यदि तिमीलाई निर्धन सम्बन्धिहरू तथा निर्धनहरूबाट पन्छिन अर्थात् असमर्थता व्यक्त गर्न परोस् भने बडो नम्रता तथा कोमलताले असमर्थता व्यक्त गर, अर्थात् उत्तर पनि दिइन्छ भने नम्रता तथा प्रेमको भाषामा न कि कटुवचन तथा दुर्व्यवहारका साथ, जस्तो कि सामान्यत: निर्धन तथा भिखारीहरूका साथ व्यवहार गर्दछन् ।

فَتَقْعُدَ مَلُومًا مَّحْسُورًا ﴿٢٩﴾

कि निन्दित र असहाय भई बसिहाल ।[1]

إِنَّ رَبَّكَ يَبْسُطُ الرِّزْقَ لِمَن يَشَاءُ وَيَقْدِرُ ۚ إِنَّهُ كَانَ بِعِبَادِهِ خَبِيرًا بَصِيرًا ﴿٣٠﴾

(३०) नि:सन्देह तिम्रो प्रभु जसको लागि चाहन्छ, जीविकाको विस्तार गरिदिन्छ तथा जसको लागि चाहन्छ संकुचित गरिदिन्छ ।[2] नि:सन्देह त्यो आफ्ना भक्तहरूबारे सूचित छ एवं सूक्ष्मदर्शी छ ।

وَلَا تَقْتُلُوا أَوْلَادَكُمْ خَشْيَةَ إِمْلَاقٍ ۖ نَّحْنُ نَرْزُقُهُمْ وَإِيَّاكُمْ ۚ إِنَّ قَتْلَهُمْ كَانَ خِطْئًا كَبِيرًا ﴿٣١﴾

(३१) तथा निर्धनताको भयले आफ्ना सन्तानहरूलाई न मार । उनलाई तथा तिमीलाई हामी नै जीविका प्रदान गर्दछौं । नि:सन्देह उनको हत्या गर्नु महापाप हो ।[3]

---

[1]पूर्वको आयतमा नकारात्मक उत्तर दिनुका नियम एवं व्यवहारको वर्णन गरिएको छ । अब माल खर्च गर्नुका नियमहरूको वर्णन गरिंदैछ, तथा त्यो यो हो कि मनुष्यले कन्जूसी गर्नुहुँदैन कि आफ्नो परिवारका आवश्यकताहरू माथि पनि व्यय नगरोस्, तथा न अपव्यय नै गरोस् कि आफ्नो शक्ति तथा आय नदेखिकन बिना रोकटोक व्यय गरिरहोस् । कन्जुसीको परिणाम यो हुनेछ कि मनुष्य धिक्कार तथा निन्दाको पात्र घोषित गरिनेछ तथा अपव्ययका परिणामस्वरूप (محسور) (थाकेको, पराजित तथा पश्चाताप गर्ने) (محسور) त्यस पशुलाई भन्दछन्, जो हिंड्दा-हिड्दै थाकिसकेको हुन्छ तथा हिंड्नबाट विवश भइसकेको होस् । अपव्यय गर्ने पनि अन्त्यमा खर्च गर र खाली हात भई बसिहाल्छ । आफ्ना हातहरूलाई आफ्ना गर्दनहरूसित बाँधिएको नराख को भावार्थ कन्जूसबाट बच्नु, तथा 'न त्यसलाई नितान्त नै खोलिदेउ' यो अपव्ययबाट बच्नु हो ।

[2]यसमा निष्ठावानहरूका लागि सान्त्वना छ कि उनको पासमा जीविका उपार्जनका साधनहरूको अधिकता छैन, त यसको अर्थ यो होइन कि अल्लाहको सदनमा उनको स्थान छैन, वरु यो जीविकाको अधिकता अथवा कमीको सम्बन्ध अल्लाहका त्यस रहस्य तथा निर्णयसित छ, जसलाई मात्र त्यही जान्दछ । त्यो आफ्ना शत्रुलाई धनवान बनाइदेओस् तथा आफ्ना मित्रलाई यति नै देओस् कि जसबाट उनी कठिनाईले आफ्नो निर्वाह गर्न सकून्, यो उसको इच्छा हो जसलाई त्यो अधिक दिन्छ, त्यो उसको प्रिय होइन तथा आवश्यकता अनुसार जीविकाधारी उसको अप्रिय होइन ।

[3]यो आयत सूर: अनआम-१५१ मा पनि आइसकेको छ । हदीसमा वर्णित छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले शिर्क पश्चात जसलाई महापाप घोषित गर्नुभएको छ, त्यो यही हो

وَلَا تَقْرَبُوا الزِّنَىٰٓ إِنَّهُۥ كَانَ فَاحِشَةً وَسَآءَ سَبِيلًا ﴿٣٢﴾

(३२) तथा सावधान ! व्यभिचारको निकट पनि नजानु किनभने त्यो घोर निर्लज्जता हो तथा अत्याधिक नराम्रो मार्ग हो ।[1]

وَلَا تَقْتُلُوا النَّفْسَ الَّتِي حَرَّمَ اللَّهُ إِلَّا بِالْحَقِّ ۗ وَمَن قُتِلَ مَظْلُومًا فَقَدْ جَعَلْنَا لِوَلِيِّهِۦ سُلْطَٰنًا فَلَا يُسْرِف فِّي الْقَتْلِ ۖ إِنَّهُۥ كَانَ مَنصُورًا ﴿٣٣﴾

(३३) तथा कुनै जीवलाई जसको हत्या अल्लाहले निषेध गरिदिएको छ कदापि अवैध हत्या नगर्नू ।[2] तथा जुन व्यक्ति निर्दोष मारिन्छ, हामीले त्यसका उत्तराधिकारीलाई अधिकार दिएका छौं, परन्तु त्यसलाई आवश्यक छ कि

«أَنْ تَقْتُلَ وَلَدَكَ خَشْيَةَ أَنْ يَطْعَمَ مَعَكَ»

"कि तिमी आफ्ना सन्तानलाई यस भयले मार कि त्यो तिम्रो साथमा खाने छ ।" (सहीह बुख़ारी, तफ़सीर सूरः बकरः, किताबुल अदब, सहीह मुस्लिम किताबुन तौहीद बाब फला तजअलू लिल्लाहे अनदादा)

वर्तमान युगका सन्तानको हत्याको पाप अत्यन्त नियोजित ढङ्गले परिवार नियोजनको आकर्षक नामबाट सम्पूर्ण संसारमा भईराखेको छ । तथा पुरूषहरू राम्रो "शिक्षा तथा प्रशिक्षण" का नाममा तथा स्त्रीहरू आफ्ना "सुन्दरता" को रक्षाका लागि साधारणतः यो अपराध गरिराखेका छन् ।

[1]इस्लाममा व्यभिचार अतिघोर महापाप तथा अपराध हो, यति घोर कि कोही विवाहित पुरुष तथा स्त्री यसलाई गर्दछ भने, समाजमा जीवित रहनुको अधिकार नै छैन । अतः उसलाई तलवारको एउटा प्रहारले मारिहाल्नु पर्याप्त छैन बरु आदेश छ कि ढुङ्गा हानि-हानि त्यसको जीवनको अन्त गरियोस् ताकि त्यो समाजका लागि शिक्षाको प्रतीक बनिहालोस् । यसैले यहाँ भनिएको छ कि व्यभिचारको निकट नजाउ अर्थात् त्यसको कारण तथा साधनबाट नै बचेर रह, जस्तै पराई नारीहरूलाई हेर्नु, उनलाई भेट्नु तथा कुरा गर्नुको साधन बनाउनु, यसैप्रकार स्त्रीहरूले सिंगार-पटार गरी बिना पर्दा घरबाट बाहिर निस्कनु आदि यी सबै कुराहरूबाट बच्नु आवश्यक छ ताकि यस निर्लज्जताबाट बच्न सकियोस् ।

[2]अधिकारका साथ हत्या गर्नुको अर्थ हत्यारालाई प्रति हत्यामा वध गर्नु, जसलाई मानव समाजको जीवन तथा सुख-शान्तिको कारण भनिएको छ । यसैप्रकार विवाहित व्यभिचारी तथा विधर्मीलाई वध गर्नुको आदेश दिएको छ ।

मारिहाल्नुमा अति नगरोस्, निःसन्देह त्यसको सहायता गरिएको छ ।[1]

وَلَا تَقْرَبُوا مَالَ الْيَتِيمِ إِلَّا بِالَّتِي هِيَ أَحْسَنُ حَتَّىٰ يَبْلُغَ أَشُدَّهُ ۚ وَأَوْفُوا بِالْعَهْدِ ۖ إِنَّ الْعَهْدَ كَانَ مَسْئُولًا ﴿٣٤﴾

(३४) तथा अनाथको धनका निकट पनि नजाउ, त्यो विधिबाहेक जुन उत्तम होस्, यहाँसम्मकि त्यो आफ्नो युवा अवस्थालाई पुगोस् ।[2] तथा वचन पूरा गर किनभने वचनको विषयमा प्रश्न हुनेछ ।[3]

وَأَوْفُوا الْكَيْلَ إِذَا كِلْتُمْ وَزِنُوا بِالْقِسْطَاسِ الْمُسْتَقِيمِ ۚ ذَٰلِكَ خَيْرٌ وَأَحْسَنُ تَأْوِيلًا ﴿٣٥﴾

(३५) र जब नाप-तौल गरेर दिन्छौ त नाप पूरा राख तथा ठीक तराजूले तौल । यही उत्तम छ ।[4] तथा यसको परिणाम पनि उत्तम छ ।

[1]अर्थात् मारिएका उत्तराधिकारीलाई यो अधिकार तथा प्रभुत्व अथवा शक्ति प्रदान गरिएको छ कि त्यो हत्यारालाई न्यायधीशको धार्मिक निर्णयका पश्चात प्रतिहत्यामा वध गरिदिनु अथवा उसबाट धन लिइहालून् अथवा क्षमा गरिदिऊन् । तथा यदि हत्या नै गरेर प्रतिहत्या लिनु छ त त्यसमा अति नगरून् कि एकको साटो दुई अथवा तीन, चारलाई मारिहालून् अथवा त्यसका अङ्ग काटेर कुल्चुन् अथवा यातना दिएर मारून्, हत्या गरिएको उत्तराधिकारी सहायता प्राप्त छ अर्थात न्यायधीश तथा अधिकारीहरूलाई त्यसको सहायता गर्नुमा जोड दिएको छ, यसकारण यसमा अल्लाहको कृतज्ञ हुनुपर्छ, न यो कि अति गरेर अल्लाहको कृतघ्न हुनु ।

[2]कसैको प्राण अनुचित रूपले बर्बाद गर्नुबाट मनाही गरे पश्चात धनको अपव्ययबाट रोकिँदैछ तथा यसमा अनाथको धन विशेष महत्व राख्दछ । यसकारण भनिएको छ कि अनाथको वयस्क हुन्जेलसम्म त्यसको धन यसप्रकारले प्रयोग गर, जसमा त्यसको लाभ होस् । यो नहोस् कि सोच-विचार नगरिकन यस्ता काममा लगाइदेऊ कि त्यो विनाश अथवा हानिमा जाओस् अथवा युवा अवस्थासम्म पुग्नुभन्दा पूर्व नै तिमी त्यसलाई समाप्त गरिदेऊ ।

[3]वचनले ती सन्धिहरू पनि तात्पर्य हुन्, जुन अल्लाह तथा त्यसको भक्त बीच छ तथा त्यो पनि जुन मानिसहरू एक आपसमा गर्दछन् । दुबै प्रकारका वचनको पालन गर्नु आवश्यक छ तथा वचन भङ्ग गर्नुमा पकड हुनेछ ।

[4]प्रतिफल तथा प्रतिकारको आधारमा उत्तम छ । यसका अतिरिक्त मानिसहरूमा विश्वास उत्पन्न गर्नुमा पनि नाप-तौलमा ईमान्दारी लाभकारी छ ।

وَلَا تَقْفُ مَا لَيْسَ لَكَ بِهِ عِلْمٌ ۚ إِنَّ السَّمْعَ وَالْبَصَرَ وَالْفُؤَادَ كُلُّ أُولَٰئِكَ كَانَ عَنْهُ مَسْئُولًا ﴿٣٦﴾

(३६) तथा जुन कुरोको तिमीलाई सूचना नै छैन, त्यसको पछाडी नलाग,[1] किनभने कान तथा आँखा एवं हृदय यिनीहरूमध्ये प्रत्येकसित सोधपूछ गरिनेछ ।[2]

وَلَا تَمْشِ فِي الْأَرْضِ مَرَحًا ۖ إِنَّكَ لَن تَخْرِقَ الْأَرْضَ وَلَن تَبْلُغَ الْجِبَالَ طُولًا ﴿٣٧﴾

(३७) तथा धर्तीमा अट्टेरीपना गरी नहिंड, किनभने तिमी न धर्तीलाई चिर्न सक्छौ तथा न लम्बाइमा पर्वतहरूलाई पुग्न सक्दछौ ।[3]

كُلُّ ذَٰلِكَ كَانَ سَيِّئُهُ عِندَ رَبِّكَ مَكْرُوهًا ﴿٣٨﴾

(३८) यी सबै कार्यहरूको नराम्रोपना (अनिष्टता) तिम्रो पालनकर्ता समीप अति अप्रिय छन् ।[4]

ذَٰلِكَ مِمَّا أَوْحَىٰ إِلَيْكَ رَبُّكَ مِنَ الْحِكْمَةِ ۗ وَلَا تَجْعَلْ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ فَتُلْقَىٰ فِي جَهَنَّمَ مَلُومًا مَّدْحُورًا ﴿٣٩﴾

(३९) यो पनि त्यस प्रकाशना (वह्यी) मध्ये छ जसलाई तिम्रो पालनकर्ताले तिमीतिर सुनीतिले अवतरित गरेको छ, अत: अल्लाहसँग अन्य कसैलाई पूज्य नवनाउनु अन्यथा धिक्कृत तथा अपमानित भई नरकमा हालिनेछौ ।

[1](قفا يقفو) को अर्थ हो पछि लाग्नु । अर्थात् जुन कुराको ज्ञान छैन, त्यसको पछाडी नलाग, अर्थात् कुविचार नराख, कसैको खोजीमा न रह, यसैप्रकार जुन कुरोको ज्ञान छैन, त्यसको अनुसरण नगर ।

[2]अर्थात् (जुन कुरोको पछाडी तिमी लाग्नेछौ, त्यसको सम्वन्धमा कानसित प्रश्न गरिनेछ कि के त्यसले सुनेको थियो, आँखासित प्रश्न हुनेछ कि के उसले देखेको थियो तथा हृदयसँग प्रश्न हुनेछ कि के उसले जानेको थियो । किनभने यिनै तीन ज्ञानका साधन हुन् । अर्थात् यी अङ्गहरूलाई अल्लाह तआला प्रलयका दिन बोल्ने शक्ति प्रदान गर्दछ तथा उनीसित सोधपुछ गरिनेछ ।

[3]घमण्ड तथा अट्टेरीपन गरी हिंड्नु, अल्लाह तआलालाई अत्यन्त अप्रिय छ । कारूनलाई यसैले उसको घर तथा कोषसहित धर्तीमा धँसाइदियो (सूर: अल-कसस-८१) हदीसमा वर्णित छ, "यो त एक व्यक्ति दुई चादर पहिरी अट्टेरीपनाले हिंडिराखेको थियो कि त्यसलाई धर्तीमा धँसाइयो तथा त्यो केयामतसम्म भाँसिदै जानेछ ।" (सहीह मुस्लिम किताबुल लिवास बाब तहरीमुत तबख्तुरे फिल मश्य मअ एज़ाबिहि बिसियाबिहि) अल्लाह तआलालाई नम्रता तथा विनम्रता प्रिय छ ।

[4]अर्थात् जुन कुरा वर्णित भए, उनीहरूमध्ये जुन नराम्रा छन्, जसबाट मना गरिएका छन्, ती अप्रिय छन् ।

أَفَأَصْفَىٰكُمْ رَبُّكُم بِالْبَنِينَ وَاتَّخَذَ مِنَ الْمَلَٰٓئِكَةِ إِنَٰثًا ۚ إِنَّكُمْ لَتَقُولُونَ قَوْلًا عَظِيمًا ﴿٤٠﴾

(४०) के पुत्रहरूका निम्ति अल्लाहले तिमीलाई निर्वाचित गरेको छ तथा स्वयं आफ्नो लागि फरिश्ताहरूलाई पुत्रीहरू बनायो ? निःसन्देह तिमी अत्यन्त ठूलो (खतरनाक) बोली बोलिराखेका छौ ।

وَلَقَدْ صَرَّفْنَا فِي هَٰذَا الْقُرْءَانِ لِيَذَّكَّرُوا وَمَا يَزِيدُهُمْ إِلَّا نُفُورًا ﴿٤١﴾

(४१) तथा हामीले त यस कुर्आनमा हरेक प्रकारले वर्णन गरिदियौं[1] ताकि मानिसहरू बुझुन् तर यसबाट पनि उनको घृणा नै बढ्दछ ।

قُل لَّوْ كَانَ مَعَهُۥٓ ءَالِهَةٌ كَمَا يَقُولُونَ إِذًا لَّابْتَغَوْا إِلَىٰ ذِى الْعَرْشِ سَبِيلًا ﴿٤٢﴾

(४२) भनिदिनुस् कि यदि अल्लाहका साथ अन्य देवता (पूज्य) पनि भएको भए जस्तो कि यिनीहरू भन्दछन्, त अवश्य उनीहरू अहिलेसम्म अर्श (सिंहासन) को स्वामीतिर मार्ग खोजिहाल्थे ।[2]

سُبْحَٰنَهُۥ وَتَعَٰلَىٰ عَمَّا يَقُولُونَ عُلُوًّا كَبِيرًا ﴿٤٣﴾

(४३) जे-जति यिनीहरू भन्दछन्, त्यसबाट त्यो पवित्र एवं महान, अति टाढा एवं अत्यधिक उच्च छ ।[3]

[1]विभिन्न प्रकारले अर्थ छ, भाषण तथा शिक्षा तर्क तथा मुक्ति, प्रलोभन तथा चेतावनी तथा उदाहरण एवं घटनाहरू, हरेक प्रकारले पटक-पटक बुझाइएको छ ताकि उनीहरू बुझून्, तर उनीहरू कुफ्र तथा मूर्तिपूजामा यसप्रकार अल्झेका छन् कि उनी सत्यको निकट हुनुको सट्टा त्यसवाट धेरै टाढा भएका छन् । यसकारण कि उनी यो ठान्दछन् कि यो कुर्आन जादू, ज्योतिष तथा कविता हो, अनि उनीहरू यस कुर्आनबाट कसरी मार्गदर्शन प्राप्त गर्नेछन् ?

[2]यसको एउटा अर्थ त यो हो कि जसरी एउटा राजा अर्को राजामाथि आक्रमण गरी विजय प्राप्त गर्दछ, त्यसरी नै यी देवता पनि अल्लाहमथि अधिकार प्राप्त गर्नुको मार्ग खोज्दथे । तथा अहिलेसम्म यस्तो भएन, जबकि ती देवताहरूलाई पूज्दै गरेको युग वितिहाले, त यसको अभिप्राय यो हो कि अल्लाहका अतिरिक्त कोही पूज्य छैन । कोही स्वाधीन शक्ति नै छैन, कोही लाभ तथा हानि पुऱ्याउनेवाला छैन । दोस्रो अर्थ यो हो कि उनीहरू अहिलेसम्म अल्लाहको निकटता प्राप्त गरिसकेका हुन्थे तथा यी मूर्तिपूजक जो विश्वास गर्दछन् कि तिनीहरूद्वारा उनी अल्लाहको निकटता प्राप्त गर्दछन्, तिनीहरूलाई पनि उनीहरूले अल्लाहका निकट पुऱ्याइसकेका हुन्थे ।

[3]अर्थात् वास्तविकता यो हो कि यी मानिसहरू अल्लाहको विषयमा जे भन्दछन् कि त्यसका साझेदार छन्, अल्लाह तआ़ला यी सबै कुराहरूबाट शुद्ध तथा महान छ ।

تُسَبِّحُ لَهُ السَّمٰوٰتُ السَّبْعُ وَالْأَرْضُ وَمَن فِيهِنَّ ۚ وَإِن مِّن شَيْءٍ إِلَّا يُسَبِّحُ بِحَمْدِهِ وَلٰكِن لَّا تَفْقَهُونَ تَسْبِيحَهُمْ ۗ إِنَّهُ كَانَ حَلِيمًا غَفُورًا ﴿٤٤﴾

(४४) सातैवटा आकाश तथा धर्ती एवं जे-जति उनीहरूमा छ, उसैको महिमागान् गर्दछन्। यस्तो कुनै वस्तु छैन जुन पवित्रता तथा महानताका साथ त्यसलाई स्मरण न गरेको होस्। हो, यो सत्य हो कि तिमी त्यसका महिमागान बुझ्न सक्दैनौ।[1] त्यो बडो सहनशील तथा क्षमाशील छ।

[1]अर्थात् सबै उसैका आज्ञाकारी तथा आ-आफ्ना शैलीमा उसको महिमा तथा गुणहरूको वर्णन गर्दछन् यद्यपि हामी उनको महिमा तथा गुणहरूको वर्णनलाई बुझ्न सक्दैनौं। यसको पुष्टि कुर्आनका अन्य आयतहरूबाट पनि हुन्छ। जस्तो आदरणीय दाऊदको विषयमा वर्णित छ।

﴿إِنَّا سَخَّرْنَا الْجِبَالَ مَعَهُ يُسَبِّحْنَ بِالْعَشِيِّ وَالْإِشْرَاقِ﴾

"हामीले पर्वतहरूलाई दाऊदको अधीन गरिदियौं, उनीहरू सन्ध्या तथा प्रात: त्यसको साथ अल्लाहको महिमा (शुद्धता) को वर्णन गर्दछन्।" (सूर: साद-१८)

केही ढुङ्गाहरूको विषयमा अल्लाह तआलाले सूर: अल-बक़र:-७४ मा भन्यो :

﴿وَإِنَّ مِنْهَا لَمَا يَهْبِطُ مِنْ خَشْيَةِ اللَّهِ﴾

"तथा केही अल्लाह तआलाको भयले ढल्छन्।"

"केही सहावा वर्णन गर्दछन् कि उनी रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका साथ भोजन गरिराखेका थिए कि उनीहरूले भोज्य पदार्थबाट अल्लाहको महिमागान गर्नुको ध्वनि सुने।" (सहीह बुख़ारी किताबुल मनाक़िब संख्या ३५७९)। एक अन्य हदीसबाट सिद्ध छ कि कमिलाहरू अल्लाहको महिमागान गर्दछन्। (सहीह बुख़ारी संख्या ३०१९ तथा सहीह मुस्लिम संख्या १७५९)। यसैप्रकार जुन हाँगाको टेक लगाएर नबी सल्लल्लाहु अलैहि वसल्लम भाषण गर्नुहुन्थ्यो, जब काठको मञ्च (बस्नु तथा उभिनुको स्थान) भयो तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले त्यस स्थानलाई छाडिदिनुभयो त बच्चाको जस्तै त्यसबाट रूनुको आवाज आउँथ्यो (सहीह बुख़ारी संख्या ३५८३)। मक्कामा एउटा ढुङ्गा थियो जसले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई सलाम गर्ने गर्दथ्यो (सहीह मुस्लिम संख्या १७८२)। यी आयतहरू तथा सहीह हदीसहरूबाट स्पष्ट छ कि जड पदार्थ तथा वनस्पतिका एउटा विशेषप्रकारको संवेदन विद्यमान छ, जसलाई यद्यपि हामी बुझ्न सक्दैनौं, तर उनी त्यस संवेदनको आधारमा अल्लाहको महिमा गर्दछन्। केही विद्वानहरू भन्दछन् कि यसबाट तात्पर्य सांकेतिक महिमा हो अर्थात् यी वस्तुहरू यस कुराका संकेत हुन् कि समस्त विश्वको रचयिता तथा सर्वशक्तिमान अल्लाह नै छ।

وَإِذَا قَرَأْتَ الْقُرْآنَ جَعَلْنَا بَيْنَكَ وَبَيْنَ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ حِجَابًا مَّسْتُورًا ﴿٤٥﴾

(४५) तथा जब तिमी कुरआन पढ्दछौ त हामी तिम्रा तथा उनीहरूबीच जो परलोक (आख़िरत) मा विश्वास गर्दैनन्, एउटा गुप्त आवरण (पर्दा) हालिदिन्छौ ।[1]

وَجَعَلْنَا عَلَىٰ قُلُوبِهِمْ أَكِنَّةً أَن يَفْقَهُوهُ وَفِي آذَانِهِمْ وَقْرًا ۚ وَإِذَا ذَكَرْتَ رَبَّكَ فِي الْقُرْآنِ وَحْدَهُ وَلَّوْا عَلَىٰ أَدْبَارِهِمْ نُفُورًا ﴿٤٦﴾

(४६) तथा उनका हृदयमा पनि पर्दा हालिदिएका छौं कि उनीहरूले यसलाई बुझ्न सकून् र उनका कानहरूमा बोझ । र जब तिमी मात्र अल्लाहको वर्णन त्यसको तौहीद (एकता) का साथ यस कुरआनको माध्यमले गर्दछौ त उनीहरू विमुख भएर पिठ्यूँ फर्काइ भाग्दछन् ।[2]

نَّحْنُ أَعْلَمُ بِمَا يَسْتَمِعُونَ بِهِ إِذْ يَسْتَمِعُونَ إِلَيْكَ وَإِذْ هُمْ نَجْوَىٰ إِذْ يَقُولُ الظَّالِمُونَ إِن تَتَّبِعُونَ إِلَّا رَجُلًا مَّسْحُورًا ﴿٤٧﴾

(४७) जुन उद्देश्यले उनी त्यसलाई सुन्दछन्, उन (का विचारहरू) सित हामी राम्ररी परिचित छौं, जब यिनीहरू तपाईंतिर कान थापेका हुन्छन् त्यतिखेर पनि र जब यिनी आपसमा सरसल्लाह गर्दछन् त्यसबेला पनि, जबकि यी अत्याचारीहरू भन्दछन् कि तिमी

---

﴿وَفِي كُلِّ شَيْءٍ لَهُ آيَةٌ ☆ تَدُلُّ عَلَى أَنَّهُ وَاحِدٌ﴾

"प्रत्येक वस्तु यस कुराको प्रमाण हो कि अल्लाह तआला एक छ ।"
परन्तु उचित कुरो प्रथम नै छ कि महिमागान आफ्नो वास्तविक अर्थमा छ ।

[1](ساتر، مستور) को अर्थमा छ । यसको अर्थ विघ्न तथा आवरण हो । अथवा (مستور عن الأبصار) (आँखाबाट ओझेल) अतः उनी त्यसलाई देख्दैनन् । यसका साथ उनको तथा मार्ग-दर्शनमध्य पर्दा परेको छ ।

[2](كنان، أكنة) (किनान) को वहुवचन हो, यस्तो पर्दा जुन हृदयहरूमा परिहालोस् । (وقر) कानहरूमा यस्तो वोझ जुन कुरआन सुन्नमा बाधित होस् । अर्थ यो भयो कि उनका हृदय कुरआन बुझ्न योग्य छैनन् तथा कान कुरआन सुनेर मार्गदर्शन प्राप्त गर्न योग्य छैनन् । तथा अल्लाहको एकताबाट त उनीहरूलाई यति घृणा छ कि त्यसलाई सुनेर भाग्छन्, यी कार्यहरूको सम्बन्ध अल्लाहबाट यिनलाई पैदा गर्नुको कारण हो । अन्यथा मार्ग-दर्शनबाट उनको इन्कार तथा घृणाको परिणाम थियो ।

उसको अनुसरणमा लागेका छौं, जसमाथि जादू गरिएको छ ।[1]

(४८) हेरौं ! उनीहरू तपाईंका लागि कस्ता-कस्ता उदाहरण दिन्छन् । अब उनीहरू विचलित भइराखेका छन्, अहिले त मार्ग पाउनु उनको सामर्थ्यमा रहेन ।[2]

انْظُرْ كَيْفَ ضَرَبُوا لَكَ الْأَمْثَالَ فَضَلُّوا فَلَا يَسْتَطِيعُونَ سَبِيلًا ﴿٤٨﴾

(४९) उनीहरूले भने कि जब हामी अस्थिहरू तथा धूलो भइहाल्नेछौं त के हामी नयाँ जन्ममा पुनः उठाएर उभ्याइनेछौं ।

وَقَالُوا أَإِذَا كُنَّا عِظَامًا وَرُفَاتًا أَإِنَّا لَمَبْعُوثُونَ خَلْقًا جَدِيدًا ﴿٤٩﴾

(५०) उत्तर दिनुस् कि तिमी ढुङ्गा बनिहाल अथवा फलाम ।[3]

قُلْ كُونُوا حِجَارَةً أَوْ حَدِيدًا ﴿٥٠﴾

(५१) अथवा कुनै अरु वस्तु जुन तिम्रा हृदयमा धेरै नै महान प्रतीत हुन्छ,[4] त्यस पश्चात उनीहरू यो सोध्नेछन् कि को छ जसले हाम्रो जीवन पुनः फर्काउनेछ ? (तपाईं) उत्तर दिनुस् कि त्यही (अल्लाह) जसले तिमीलाई प्रथम पटक जन्म दियो, यसमा उनीहरू आफ्ना टाउको हल्लाइ-हल्लाइ[5] तपाईंसित सोध्नेछन्

أَوْ خَلْقًا مِمَّا يَكْبُرُ فِي صُدُورِكُمْ فَسَيَقُولُونَ مَنْ يُعِيدُنَا قُلِ الَّذِي فَطَرَكُمْ أَوَّلَ مَرَّةٍ فَسَيُنْغِضُونَ إِلَيْكَ رُءُوسَهُمْ وَيَقُولُونَ مَتَىٰ هُوَ قُلْ عَسَىٰ أَنْ يَكُونَ قَرِيبًا ﴿٥١﴾

[1]अर्थात् नबी सल्लल्लाहु अलैहि वसल्लमलाई यिनी जादूले पीडित ठान्दछन् तथा यो बुझेपनि कुरआन सुन्दछन् तथा आपसमा कानेखुसी गर्दछन्, यसकारण मार्ग-दर्शनबाट वञ्चित नै रहन्छन् ।

[2]कहिले जादूगर, कहिले जादूबाट पीडित, कहिले पागल, कहिले ज्योतिषि भन्दछन्, यसप्रकार भौंतारिरहेका छन् । मार्गदर्शन उनीहरूलाई कसरी प्राप्त होस् ?

[3]जुन माटो तथा हड्डीभन्दा पनि कठोर छ तथा जसमा जीवनको चिन्ह उत्पन्न गर्नु अधिक जटिल छ ।

[4]अर्थात् त्यसभन्दा पनि साह्रो कुरा जुन तिम्रो ज्ञानमा छ, त्यो बनिहाल तथा फेरि सोध कि कसले जीवित गर्नेछ ?

[5](أنغض يُنْغِض) को अर्थ हो टाउको हल्लाउनु अर्थात् उपहास स्वरुप उनी भन्नेछन् कि यो पुनर्जीवन कहिले हुनेछ ?

कि त्यसो भए यो कहिले हुनेछ ? त (तपाईं) उत्तर दिनुस् कि के आश्चर्य छ त्यो निकट नै होस् ।[1]

(५२) जुन दिन त्यसले तिमीलाई बोलाउनेछ[2] तिमी त्यसको प्रशंसा गर्दै आज्ञा पालन गर्नेछौ तथा अनुमान गर्नेछौ कि तिम्रो रहनु अति अल्प छ ।

يَوْمَ يَدْعُوكُمْ فَتَسْتَجِيبُونَ بِحَمْدِهِۦ وَتَظُنُّونَ إِن لَّبِثْتُمْ إِلَّا قَلِيلًا ﴿٥٢﴾

(५३) तथा मेरा भक्तहरूलाई भनिदिनुस् कि उनी साह्रै राम्रो कुरा आफ्नो मुखबाट निकाल्ने

وَقُل لِّعِبَادِى يَقُولُوا۟ ٱلَّتِى هِىَ أَحْسَنُ ۚ إِنَّ ٱلشَّيْطَٰنَ يَنزَغُ بَيْنَهُمْ

[1](قريب) को अर्थ हो हुने वस्तु (كل ما هو آت فهو قريب) "प्रत्येक घटित हुने वस्तु समीप छ ।" तथा (عسى) पनि कुरआनमा निश्चय तथा अवश्य हुनुको अर्थमा प्रयोग भएको छ अर्थात् केयामत हुने कुरो निश्चित तथा आवश्यक छ ।

[2]'बोलाउनेछ' को अर्थ हो कब्रहरू (समाधि) बाट जीवित पारी सदनमा उपस्थित गर्नेछ, तिमी त्यसको महिमाको वर्णन गर्दै आदेशको पालन गर्नेछौ अथवा त्यसलाई चिन्दै त्यसको सामु उपस्थित हुनेछौ ।

[3]त्यहाँ यस संसारको जीवन अति अल्पप्रतीत हुनेछ ।

﴿كَأَنَّهُمْ يَوْمَ يَرَوْنَهَا لَمْ يَلْبَثُوٓا۟ إِلَّا عَشِيَّةً أَوْ ضُحَىٰهَا﴾

"जब केयामतलाई देख्नेछन्, त सांसारिक जीवन यस्तो लाग्नेछ कि जस्तो एक सन्ध्या अथवा एक प्रातः मात्र रहेका छन् ।" (सूरः अल-नाज़िआत-४६) यसै विषयलाई अन्य स्थानहरूमा पनि वर्णन गरिएको छ । जस्तै सूरः ताहा-१०२ तथा १०४, सूरः अल-रूम-५५, सूरः अल-मोमिनून-११२ तथा ११४ । केही विद्वानहरू भन्छन् कि प्रथम फूँक हुनेछ त मरेका मानिसहरू जीवित भइहाल्ने छन् । अनि दोस्रो फूँक (नाद) मा हश्रका मैदानमा हिसाब-किताबका लागि एकत्रित हुनेछन्, दुबै फूँकका मध्यको अवधिमा उनीहरूलाई कुनै यातना दिइने छैन, उनीहरू निदाउनेछन् । दोस्रो फूँकमा भन्नेछन्, "अफसोच" हामीलाई हाम्रो निद्रबाट कसले ब्यूँझाएको छ ?" (सूरः यासीन-५२) (फ़तहुल क़दीर) पहिलो कुरो अधिक ठीक छ ।

إِنَّ الشَّيْطٰنَ كَانَ لِلْإِنْسَانِ عَدُوًّا مُّبِيْنًا ﴿٥٣﴾

गरून्[1] किनभने शैतानले आपसमा फुट पार्न लगाउँछ ।[2] निःसन्देह शैतान मनुष्यको खुल्ला शत्रु हो ।

رَبُّكُمْ أَعْلَمُ بِكُمْ ۖ إِنْ يَّشَأْ يَرْحَمْكُمْ أَوْ إِنْ يَّشَأْ يُعَذِّبْكُمْ ۖ وَمَآ أَرْسَلْنٰكَ عَلَيْهِمْ وَكِيْلًا ﴿٥٤﴾

(५४) तिम्रो पोषक तिम्रो अपेक्षा तिमीभन्दा अधिक ज्ञाता छ । यदि त्यो चाहन्छ भने तिमीमाथि दया गर्दछ, चाहन्छ भने तिमीलाई दण्ड दिन्छ ।[3] हामीले तपाईंलाई उनीहरूको उत्तरदायी बनाएर पठाएका छैनौं ।[4]

وَرَبُّكَ أَعْلَمُ بِمَنْ فِي السَّمٰوٰتِ وَالْأَرْضِ ۗ وَلَقَدْ فَضَّلْنَا بَعْضَ النَّبِيّٖنَ

(५५) तथा आकाशहरू तथा धर्तीमा जे-जति छ, तपाईंको प्रभु सबै राम्ररी जान्दछ । हामीले केही पैग़म्बरहरूलाई केहीमाथि श्रेष्ठता

[1]अर्थात् आपसमा कुराकानी गर्दाखेरि भाषाको प्रयोगमा सावधानी गर्नुस्, राम्रा शब्द बोल्नुस् । यसैप्रकार काफ़िर तथा मूर्तिपूजकहरू एवं अहले किताबलाई सम्बोधित गर्नु परेको अवस्थामा उनीहरूसित पनि प्रेमपूर्वक एवं मृदुल शब्दहरूमा कुराकानी गर्नुस् ।

[2]भाषामा अलिकति पनि चूक हुनाले शैतान जो तिम्रो खुल्ला तथा आदिदेखि शत्रु छ, तिम्रा बीच आपसमा उपद्रव गराउन सक्छ अथवा काफ़िर तथा मूर्तिपूजकहरूका हृदयमा तिम्रो लागि अधिक द्वेष तथा घृणा उत्पन्न गर्न सक्दछ । हदीसमा वर्णन छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : तिमीमध्येबाट कोही व्यक्ति आफ्नो भाई (मुसलमान) तिर हतियारका साथ संकेत नगरोस्, यसकारण कि त्यो जान्दैन कि शैतान शायद त्यसको हातबाट त्यो हतियार चलाउन लगाइदेओस् । (तथा त्यस मुसलमान भाईलाई लागिहालोस् जसबाट त्यसको मृत्यु हुनसक्छ) त त्यो नरकको खाल्डोमा गई खसोस् ।" (सहीह बुख़ारी किताबुल फ़ेतन बाब मन हमल अलैन स्सेलाह फलैस मिन्ना तथा सहीह मुस्लिम किताबुल बिर्रे बाबुन नह्ये मिनल इशारते बिस-सेलाह)

[3]यदि सम्बोधन मूर्तिपूजकहरूसित छ भने कृपाको अर्थ इस्लाम धारण गर्नुको सौभाग्यसित हुनेछ तथा यातनाबाट तात्पर्य मूर्तिपूजा गर्नासाथ मृत्यु छ, जसका कारण उनीहरू यातनाका अधिकारी हुनेछन् तथा यदि सम्बोधन ईमानवालाहरूसित छ भने कृपाको अर्थ हुनेछ कि त्यसले काफ़िरहरूबाट तिम्रो सुरक्षा गर्नेछ तथा यातनाको अर्थ हो काफ़िरहरूको मुसलमानहरूमाथि प्रभुत्व तथा अधिपत्य ।

[4]कि तपाईं उनीहरूलाई अवश्य कुफ़्रको दलदलबाट निकाल्नुस् अथवा उनीहरूका कुफ़्रमा दृढ रहेमा तपाईंसित सोधपूछ हुन्छ ।

عَلٰى بَعْضٍ وَّاٰتَيْنَا دَاوٗدَ زَبُوْرًا ﴿٥٥﴾

तथा प्रतिष्ठा प्रदान गरेका छौं ।[1] तथा दाऊदलाई ज़बूर हामीले नै प्रदान गरेका छौं ।

قُلِ ادْعُوا الَّذِيْنَ زَعَمْتُمْ مِّنْ دُوْنِهٖ فَلَا يَمْلِكُوْنَ كَشْفَ الضُّرِّ عَنْكُمْ وَلَا تَحْوِيْلًا ﴿٥٦﴾

(५६) भनिदिनुस् कि (अल्लाहका) अतिरिक्त जसलाई तिमी देवता (वंदनीय) ठानिराखेका छौ, उनीहरूलाई पुकार तर उनीहरू न त तिमीबाट कुनै दुख हटाउन सक्छन् न परिवर्तित गर्न सक्छन् ।

اُولٰٓئِكَ الَّذِيْنَ يَدْعُوْنَ يَبْتَغُوْنَ اِلٰى رَبِّهِمُ الْوَسِيْلَةَ اَيُّهُمْ اَقْرَبُ وَيَرْجُوْنَ رَحْمَتَهٗ وَيَخَافُوْنَ عَذَابَهٗ ؕ اِنَّ عَذَابَ رَبِّكَ كَانَ مَحْذُوْرًا ﴿٥٧﴾

(५७) जसलाई यिनीहरू पुकार्दछन्, उनीहरू स्वयं आफ्ना पालनकर्ताको सामीप्यको खोजीमा रहन्छन् कि उनीहरूमध्ये कुनै अधिक निकट भइहालोस्, उनीहरू स्वयं त्यसको कृपाको आशा राख्दछन् तथा त्यसको यातनाबाट भयभीत रहन्छन्,[2] (कुरो पनि यही हो) कि तिम्रो प्रभुको यातना तर्सिनुपर्ने कुरो हो ।

[1]यो विषय ﴿تِلْكَ الرُّسُلُ فَضَّلْنَا بَعْضَهُمْ عَلٰى بَعْضٍ﴾ मा पनि गुज्रिसकेको छ । यहाँ पुन: मक्काका काफ़िरहरूको उत्तरमा यस विषयको पुनरावृत्ति भएको छ, जो भन्दथे कि के अल्लाहलाई रिसालतका लागि यो मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) नै पाइएको थियो ? अल्लाह तआलाले उत्तर दियो कि कसैलाई रिसालतको लागि चयन गर्नु तथा कुनै एक नबीलाई अर्कोमाथि श्रेष्ठता दिनु, यो अल्लाहकै अधिकारमा छ ।

[2]प्रस्तुत आयतमा (من دون الله) बाट तात्पर्य फरिश्ता तथा महात्माहरूको ती चित्र तथा मूर्ति हुन् जसको उनीहरू पूजा गर्दथे अथवा आदरणीय उज़ैर तथा मसीह हुन्, जसलाई यहूदी तथा इसाई अल्लाहका पुत्र भन्थे तथा उनलाई दैवी गुणहरूबाट युक्त मान्दथे अथवा उनी जिन्नात हुन्, जो मुसलमान भइहालेका थिए तथा मूर्तिपूजक उनको पूजा गर्दथे । यसकारण कि यस आयतमा भनिदैछ कि उनीहरू स्वयं पनि अल्लाहको निकटता प्राप्त गर्न प्रयत्न गर्दथे तथा त्यसको कृपाको कामना गर्दथे तथा त्यसको यातनाबाट भयभीत छन् तथा यो गुण जडपदार्थहरू (ढुङ्गा) मा हुनसक्दैन । यस आयतबाट स्पष्ट हुन्छ कि (من دون الله) (अल्लाहका अतिरिक्त जसको पूजा गर्दै आइराखिएको छ) उनी केवल पत्थर का मूर्तिहरू नै थिएनन्, उनी अल्लाहका भक्त पनि थिए । जसमध्ये केही फरिश्ता, केही पुण्य आत्मा, केही नबी तथा केही जिन्नात थिए । अल्लाह तआलाले सबैको विषयमा भन्यो कि उनी केही गर्न सक्दैनन् न कसैको दुखको निवारण गर्न सक्दछन् न कसैका परिस्थितिहरू बदल्न सक्छन् । "आफ्नो प्रभुको निकटता प्राप्त गर्ने धुनमा रहन्छन् ।" को अर्थ सत्य कर्मले अल्लाहको निकटता खोज्छन् । यही माध्यम हो जसलाई कुरआनमा वर्णन गरिएको छ,

وَإِن مِّن قَرْيَةٍ إِلَّا نَحْنُ مُهْلِكُوهَا قَبْلَ يَوْمِ الْقِيَامَةِ أَوْ مُعَذِّبُوهَا عَذَابًا شَدِيدًا ۚ كَانَ ذَٰلِكَ فِي الْكِتَابِ مَسْطُورًا ﴿٥٨﴾

(५८) तथा जति पनि वस्तीहरू छन् हामीले क़ेयामतका दिनभन्दा पूर्व नै या त उनीहरूलाई ध्वस्त गरिदिनेछौं अथवा अधिक दण्ड दिनेछौं । यो त किताबमा लेखिसकिएको छ ।[1]

وَمَا مَنَعَنَا أَن نُّرْسِلَ بِالْآيَاتِ إِلَّا أَن كَذَّبَ بِهَا الْأَوَّلُونَ ۚ وَآتَيْنَا ثَمُودَ النَّاقَةَ مُبْصِرَةً فَظَلَمُوا بِهَا ۚ

(५९) तथा हामीलाई निशानीहरू (चमत्कार) उतार्नुबाट रोक मात्र यसै कुराको छ कि पहिलाका मानिसहरूले यिनीहरूलाई झुट्लाइसकेका छन् ।[2] हामीले समूदलाई प्रतीकको रूपमा ऊटनी दियौं तर उनीहरूले त्यसमाथि

त्यो होइन जसलाई कब्रपूजक वर्णन गर्दछन् कि मरेका व्यक्तिहरूका नामको भोग-प्रसाद (नज़र-नियाज़) देऊ, उनका कब्रहरूमाथि चादर चढाऊ तथा मेलाको आयेजन गर एवं उनीसित सहायताको प्रार्थना तथा गुहार गर । यो माध्यम होइन, यो त उनको पूजा हो, जुन शिर्क हो । अल्लाह तआ़लाले प्रत्येक मुसलमानलाई सुरक्षित राखून् । (आमीन)

[1]किताबसित तात्पर्य सुरक्षित पुस्तक (लौहे महफ़ूज) हो । अर्थ यो हो कि अल्लाह तआ़लाको तर्फबाट यो कुरो निश्चित छ, जुन सुरक्षित पुस्तकमा लेखिएको छ कि हामी काफ़िरहरूको प्रत्येक वस्तीलाई या त मृत्युद्वारा नष्ट गरिदिनेछौं तथा वस्तीसित तात्पर्य नगरवासी हुन् तथा विनाशको कारण उनको कुफ्र तथा मूर्तिपूजन तथा अत्याचार तथा दुष्टता हो अथवा यसको अतिरिक्त यो विनाश क़यामतभन्दा पूर्व घटित हुनेछ, अन्यथा क़यामतका दिन त प्रत्येक वस्ती नै विलीन तथा विनाशको शिकार बनिहाल्नेछ ।

[2]यो आयत त्यस समय अवतरित भयो जुनबेला मक्काका काफ़िरहरूले यो माँग गरे कि सफाको पर्वतलाई स्वर्ण बनाइयोस् अथवा मक्काका पर्वत आफ्नो स्थानबाट हटाईयून् ताकि त्यहाँ खेती गर्न सकियोस्, जसबारे अल्लाह तआ़लाले जिब्रीलको माध्यमबाट सन्देश पठायो कि उनीहरूका माँग हामी पूरा गर्न तयार छौं, तर यदि त्यस पश्चात पनि उनी ईमान स्थापित गरेनन् भने त फेरि उनको विनाश निश्चित छ । त्यसपछि उनीहरूलाई अवसर दिइने छैन । नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि यसै कुरालाई उचित ठान्नुभो कि यिनका माँग पूरा नगरियून् ताकि यिनी निश्चित विनाशबाट बाँचून् । (मुसनद अहमद भाग १ पृष्ठ २५८) यस आयतमा पनि अल्लाह तआ़लाले यही विषय वर्णन गरेको छ कि उनका इच्छा अनुसार हामीलाई निशानीहरू अवतरित गर्नुमा कुनै कठिनाई छैन । परन्तु हामी यसबाट यसकारण बचिराखेका छौं कि पूर्वका समुदायहरूले पनि आफ्ना इच्छा अनुसार निशानीहरू माँगेका थिए, जुन उनीहरूलाई देखाइयो, तर त्यसको उपरान्त पनि उनीहरूले झुट्लाए तथा ईमान कायम गरेनन्, जसको परिणामस्वरुप उनीहरू नाश गरिए ।

وَمَا نُرْسِلُ بِالْاٰيٰتِ اِلَّا تَخْوِيْفًا

अत्याचार गरे ।[1] हामी त मानिसहरूलाई केवल सतर्क गर्नको लागि प्रतीक पठाउँछौं ।

وَاِذْ قُلْنَا لَكَ اِنَّ رَبَّكَ اَحَاطَ بِالنَّاسِ ۭ وَمَا جَعَلْنَا الرُّءْيَا الَّتِيْٓ اَرَيْنٰكَ اِلَّا فِتْنَةً لِّلنَّاسِ وَالشَّجَرَةَ الْمَلْعُوْنَةَ فِي الْقُرْاٰنِ ۭ وَنُخَوِّفُهُمْ ۙ فَمَا يَزِيْدُهُمْ اِلَّا طُغْيَانًا كَبِيْرًا ۝

(६०) तथा याद गर्नुस् जबकि हामीले तपाईसित भन्यौं कि तपाईको प्रभुले मानिसहरूलाई घेरिसकेको छ ।[2] जुन दर्शन तिमीलाई देखाएका थियौं, त्यो मानिसहरूका लागि स्पष्ट परीक्षा नै थियो तथा त्यसैप्रकार त्यो वृक्ष पनि जसबाट कुर्आनमा घृणाको प्रदर्शन गरिएको छ ।[3] हामी उनीहरूलाई सतर्क गरिराखेका छौं तर यो उनलाई अझै धेरै दुष्टतामा बढाइराखेको छ ।[4]

[1]समूदको समुदायलाई उदाहरणस्वरुप वर्णन गऱ्यो किनभने इच्छा अनुसार चट्टानबाट ऊँटनी प्रकट गरिएको थियो तर ती अत्याचारीहरूले विश्वास गर्नुको सट्टा, त्यस ऊँटनीलाई नै मारिहाले, जसको कारण तीन दिन पश्चात प्रकोप आइपुग्यो ।

[2]अर्थात् मानिसहरू अल्लाहको प्रभाव एवं इच्छाका अधीन छन्, तथा जे अल्लाहले चाहनेछ, त्यही हुनेछ न कि त्यो जुन उनीहरू चाहन्छन्, अथवा तात्पर्य मक्कावासी हुन् कि उनीहरू अल्लाहको आदेशाधीन छन्, तपाईं सल्लल्लाहु अलैहि वसल्लम निश्चिन्त रिसालतको प्रचार-प्रसार गर्नुस्, उनीहरू तपाईं सल्लल्लाहु अलैहि वसल्लमको केही बिगार्न सक्ने छैन, हामी तपाईं सल्लल्लाहु अलैहि वसल्लमको सुरक्षा गर्नेछौं, अथवा बद्रको युद्ध तथा मक्का विजयको अवसरमा जसरी अल्लाहले मक्काका मूर्तिपूजकहरूलाई अपमानजनक पराजय दियो, त्यसलाई स्पष्ट गरिदैछ ।

[3]सहावा तथा तावईनले यस रूया (दर्शन) को व्याख्या प्रत्यक्ष दर्शनबाट गरेका छन् तथा यसबाट तात्पर्य मेराजको घटना हो, जुन धेरैजसो क्षीर्ण मानिसहरूको लागि विचलनको कारण वन्यो तथा उनी विधर्मी भए । तथा वृक्षबाट तात्पर्य जक़्क़ूम (नरकीय) को वृक्ष हो, जसलाई नबी सल्लल्लाहु अलैहि वसल्लमले मेराजको राति नरकमा देख्नुभो । (الملعونة) सित तात्पर्य खानेहरूमाथि अर्थात् नरकवासीहरूमाथि धिक्कार । जस्तो अन्य स्थानमा छ ।

﴿اِنَّ شَجَرَتَ الزَّقُّوْمِ ☆ طَعَامُ الْاَثِيْمِ﴾

"नरकीय वृक्ष (जक़्क़ूम) पापीहरूको खाना हो ।" (सूरः दुःखान-४३,४४)

[4]अर्थात् काफ़िरहरूका हृदयमा जुन द्वेष तथा ईर्ष्या छ, त्यसको कारण निशानीहरू देखेर ईमान ल्याउनुको सट्टा उनको उग्रता तथा व्याकुलतामा अत्याधिक बृद्धि हुन्छ ।

(६१) तथा जब हामीले फरिश्ताहरूलाई आदेश दियौं कि आदमलाई दण्डवत् (सजदा) गर त इब्लीस बाहेक सबैले गरे । उसले भन्यो कि के म त्यसलाई दण्डवत् गरूँ जसलाई तिमीले माटोले बनाएका छौ ।

وَإِذْ قُلْنَا لِلْمَلَٰٓئِكَةِ ٱسْجُدُوا۟ لِءَادَمَ فَسَجَدُوٓا۟ إِلَّآ إِبْلِيسَ قَالَ ءَأَسْجُدُ لِمَنْ خَلَقْتَ طِينًا ﴿٦١﴾

(६२) भन्नथाल्यो: ठीक छ हेर ! त्यसलाई तिमीले ममाथि श्रेष्ठता त दिएका छौ, तर यदि तिमीले मलाई क़ियामतसम्म अवसर दियौ भने म यसका सन्तानमध्ये अति कम मानिसहरूबाहेक, आफ्नो वशमा गरिहाल्नेछु ।[1]

قَالَ أَرَءَيْتَكَ هَٰذَا ٱلَّذِى كَرَّمْتَ عَلَىَّ لَئِنْ أَخَّرْتَنِ إِلَىٰ يَوْمِ ٱلْقِيَٰمَةِ لَأَحْتَنِكَنَّ ذُرِّيَّتَهُۥٓ إِلَّا قَلِيلًا ﴿٦٢﴾

(६३) आदेश भयो कि जा, उनीहरूमध्ये जो पनि तिम्रो अनुयायी हुनेछ त तिमीसित सबैको दण्ड नरक हो, जुन पूर्ण प्रतिकार हो ।

قَالَ ٱذْهَبْ فَمَن تَبِعَكَ مِنْهُمْ فَإِنَّ جَهَنَّمَ جَزَآؤُكُمْ جَزَآءً مَّوْفُورًا ﴿٦٣﴾

(६४) उनीहरूमध्ये तँ जसलाई पनि आफ्नो कुराले बहकाउन सक्छस्, बहकाइहाल[2] तथा उनीमाथि आफ्ना सवार तथा पैदल (सेना) द्वारा जाईलाग,[3] तथा उनका माल तथा सन्तानमध्येबाट आफ्नो भाग पनि लग ।[4]

وَٱسْتَفْزِزْ مَنِ ٱسْتَطَعْتَ مِنْهُم بِصَوْتِكَ وَأَجْلِبْ عَلَيْهِم بِخَيْلِكَ وَرَجِلِكَ وَشَارِكْهُمْ فِى ٱلْأَمْوَٰلِ

[1]अर्थात् त्यसमाथि उसको अधिकार प्राप्त गर्नेछु तथा त्यसलाई जुनप्रकार चाहन्छु विपथ गर्नेछु । तर केही मानिसहरू मेरो छल तथा दाँवबाट बच्नेछन् । आदम तथा इब्लीसको यो कथा यसभन्दा पूर्व सूरः अल-बक़रः, सूरः अल-आराफ़ तथा सूरः अल-हिज्रमा आइसकेको छ । यहाँ चौथोपटक यसलाई वर्णन गरिदैछ । यसका अतिरिक्त सूरः अल क़हफ़, सूरः ताहा र सूरः सादमा पनि यसको वर्णन आउनेछ ।

[2]ध्वनिवाट तात्पर्य आकर्षक नैवेद्य अथवा गीत-संगीत एवं आनन्द-मनोरञ्जनका यन्त्र हुन् जसद्वारा शैतान अधिकतर मानिसहरूलाई विचलित गरिराखेको छ ।

[3]ती सेनाहरूबाट तात्पर्य मनुष्य तथा जिन्नहरूका ती सवार तथा पैदल सेना हो, जुन शैतानका शिष्य तथा त्यसको जालका शिकार छन् एवं शैतानको जस्तो मानिसहरूलाई विचलित गर्दछन् अथवा तात्पर्य हो, प्रत्येक संभावित साधन जुन शैतान विचलनको लागि प्रयोग गर्दछ ।

[4]मालमा शैतानको भागीदारीको अर्थ हो, अनुचित साधनहरूबाट धन उपार्जन तथा अपव्यय गर्नु हो र यसैप्रकार पशुहरूलाई मूर्तिहरूका नाममा दान गर्नु, जस्तै बहीरः तथा

وَالْأَوْلَادِ وَعِدْهُمْ ۚ وَمَا يَعِدُهُمُ الشَّيْطَٰنُ إِلَّا غُرُورًا ﴿٦٤﴾

तथा उनीहरूलाई (मिथ्या) वचन दिइहाल ।[1] उनीहरूसित जति पनि वचन शैतानका हुन्छन्, सबै पूर्णतः धोका हुन् ।[2]

إِنَّ عِبَادِي لَيْسَ لَكَ عَلَيْهِمْ سُلْطَٰنٌ ۚ وَكَفَىٰ بِرَبِّكَ وَكِيلًا ﴿٦٥﴾

(६५) मेरा सत्य भक्तहरूमाथि तेरो कुनै अधिकार तथा वश छैन ।[3] तथा तेरो पालनकर्ता बडो कार्यक्षम पर्याप्त छ ।[4]

رَّبُّكُمُ الَّذِي يُزْجِي لَكُمُ الْفُلْكَ فِي الْبَحْرِ لِتَبْتَغُوا مِن فَضْلِهِ ۚ إِنَّهُ كَانَ بِكُمْ رَحِيمًا ﴿٦٦﴾

(६६) तिम्रो पालनकर्ता त्यो हो, जो तिम्रो लागि नदीमा डुङ्गाहरू चलाउँछ ताकि तिमी त्यसको उपकारको खोजी गर । त्यो तिमीमाथि अत्याधिक कृपालु छ ।[5]

---

सायेबः आदि । तथा सन्तानमा भागीदारीको अर्थ हो व्यभिचार, गुरूप्रसाद, कृष्णदास, आदि नाम राख्नु, इस्लामी नियमहरूका विपरीत उनलाई शिक्षा-दीक्षा दिनु कि उनी दुर्व्यवहारी तथा कुचरित्र बनून्, उनलाई निर्धनताको भयले जीवित गाडिदिनु, हत्या गरिदिनु, गर्भपात गराउनु, सन्तानलाई अन्धविश्वासी, यहूदी तथा इसाई आदि बनाउनु तथा बिना सुन्नतबाट सिद्ध प्रार्थनाहरूलाई पढि पत्नीसित संभोग गर्नु आदि हो । यी सबै परिस्थितिहरूमा शैतानको भागीदारी हुनजान्छ ।

[1]कि कुनै स्वर्ग-नरक छैन, अथवा मरे पश्चात पुनः जीवित हुने छैनौं आदि ।

[2]अभिमान (धोका) को अर्थ हुन्छ अनुचित कार्यलाई यसप्रकार अलंकृत गरियोस् कि त्यो राम्रो तथा उचित लागोस् ।

[3]भक्तहरूलाई स्वयंसित सम्बन्धित गर्नु, यो सम्मान तथा आदर स्वरूप हो जसबाट ज्ञात भयो कि अल्लाहका विशेष भक्तहरूलाई शैतान विचलित गर्नुमा असफल रहन्छ ।

[4]अर्थात् जो सही अर्थहरूमा अल्लाहको भक्त बन्छ, त्यसैमाथि भरोसा तथा विश्वास गर्दछ त अल्लाह पनि त्यसको मित्र तथा कार्यक्षम बन्दछ ।

[5]यो उसको उपकार तथा कृपा नै हो कि उसले समुद्रलाई मनुष्यका नियन्त्रणमा गरिदिएको छ तथा तिनीहरू त्यसमाथि डुङ्गा तथा जलयान चलाएर एक देशबाट अर्को देश भ्रमण गर्दछन् तथा व्यापार गर्दछन् ।

(६७) तथा समुद्रहरूमा विपत्ति पुग्नासाथ जसलाई तिमीले पुकार्दथ्यौ, सबै हराउँछन्, केवल त्यही (अल्लाह) शेष रहन्छ । अनि जब त्यसले तिमीलाई स्थलतिर सुरक्षित ल्याउँछ, तब तिमी विमुख भइहाल्दछौ । मनुष्य अत्याधिक कृतघ्न छ ।[1]

وَإِذَا مَسَّكُمُ الضُّرُّ فِي الْبَحْرِ ضَلَّ مَن تَدْعُونَ إِلَّا إِيَّاهُ فَلَمَّا نَجَّاكُمْ إِلَى الْبَرِّ أَعْرَضْتُمْ وَكَانَ الْإِنسَانُ كَفُورًا ﴿٦٧﴾

(६८) त के तिमी यसबाट निर्भय भइसकेका छौ कि तिमीलाई स्थलको कुनै भागमा (लगी धर्ती) मा गाड्न सक्छ अथवा तिमीमाथि ढुङ्गाको हुरी पठाउन सक्छ ।[2] अनि तिमी आफ्नो लागि कुनै रक्षक पाउन न सकौला ।

أَفَأَمِنتُمْ أَن يَخْسِفَ بِكُمْ جَانِبَ الْبَرِّ أَوْ يُرْسِلَ عَلَيْكُمْ حَاصِبًا ثُمَّ لَا تَجِدُوا لَكُمْ وَكِيلًا ﴿٦٨﴾

(६९) के तिमी यस कुराबाट निर्भय भइसकेका छौ कि (अल्लाह तआला) पुनः तिमीलाई समुद्रको यात्रामा लग्नेछैन र तिमीमाथि प्रचण्ड तूफानी वायु पठाउनेछैन तथा तिम्रो कुफ्रका कारण तिमीलाई डुवाइदिने छैन । अनि फेरि तिमीले आफ्नो लागि यसमा हाम्रो बिरूद्ध कोही पाउने छैनौ ।[3]

أَمْ أَمِنتُمْ أَن يُعِيدَكُمْ فِيهِ تَارَةً أُخْرَىٰ فَيُرْسِلَ عَلَيْكُمْ قَاصِفًا مِّنَ الرِّيحِ فَيُغْرِقَكُم بِمَا كَفَرْتُمْ ثُمَّ لَا تَجِدُوا لَكُمْ عَلَيْنَا بِهِ تَبِيعًا ﴿٦٩﴾

[1]यो विषय पूर्वमा पनि कैयन् स्थानहरूमा गुज्रिसकेको छ ।

[2]अर्थात् समुद्रवाट निस्के पश्चात तिमी जुन अल्लाहलाई बिर्सिदिन्छौ, त के तिमी जान्दैनौ कि त्यो स्थलमा पनि तिमीलाई समात्न सक्छ, तिमीलाई त्यो धर्तीमा पनि गाड्न सक्छ अथवा ढुङ्गाहरूको वर्षा गरी ध्वस्त गर्न सक्छ जसरी केही विगत समुदायहरूलाई यसैप्रकार ध्वस्त गरिदियो ।

[3](قاصف) यस्तो तीव्र एवं उग्र समुद्री वायुलाई भन्दछन् जसले डुङ्गाहरूलाई भाँचिदिन्छ तथा उनीहरूलाई डुवाइदिन्छ । (تبيعا) प्रतिशोध लिने, पछि लाग्ने अर्थात तिमी डुविसकेपछि हामीसँग सोधोस् कि तिमीले हाम्रा भक्तहरूलाई किन डुबायौ ? अर्थ यो हो कि एकपटक समुद्रबाट निस्के पश्चात के तिमीलाई पुनः समुद्रमा जानुको आवश्यकता पर्ने छैन ? तथा त्यहाँ विपत्तिमा पार्न सक्दैन ?

(७०) तथा निःसन्देह हामीले आदमका सन्तानलाई बडो सम्मान दियौं ।[१] तथा उनीहरूलाई थल एवं जलका सवारी दियौं ।[२] तथा उनीहरूलाई पवित्र वस्तुहरूबाट जीविका प्रदान गर्‍यौं[३] तथा आफ्ना थुप्रै सृष्टिहरूमाथि उनीहरूलाई श्रेष्ठता प्रदान गर्‍यौं ।[४]

وَلَقَدْ كَرَّمْنَا بَنِيٓ ءَادَمَ وَحَمَلْنَٰهُمْ فِي ٱلْبَرِّ وَٱلْبَحْرِ وَرَزَقْنَٰهُم مِّنَ ٱلطَّيِّبَٰتِ وَفَضَّلْنَٰهُمْ عَلَىٰ كَثِيرٍ مِّمَّنْ خَلَقْنَا تَفْضِيلًا ۝٧٠

(७१) (त्यस दिनसित तर्स) जुन दिन हामीले प्रत्येक समुदायलाई त्यसको नायककासाथ बोलाउनेछौं ।[५] अनि जसलाई पनि

يَوْمَ نَدْعُوا۟ كُلَّ أُنَاسٍۭ بِإِمَٰمِهِمْ

[१]यो मान तथा सम्मान मनुष्यको रूपमा सबैलाई प्राप्त छ चाहे ईमानवाला होस् अथवा काफ़िर किनभने यो सम्मान अन्य सृष्टि जीव तथा जडपदार्थ एवं वनस्पति आदिको सापेक्ष छ। तथा यो सम्मान विभिन्न रूपले छ। जुनप्रकार रङ्ग-रूप, शरीर, स्वरूप एवं आकार-प्रकार अल्लाह तआलाले मनुष्यलाई प्रदान गरेको छ, त्यो कुनै अन्य सृष्टिलाई प्राप्त छैन। जुन बुद्धि मनुष्यलाई प्रदान गर्‍यो, पशु आदि त्यसबाट वञ्चित छन्। यसका अतिरिक्त त्यो यसै बुद्धिले उचित, अनुचित, लाभकारी हानिकारक, सुन्दर तथा कुरूपमा निर्णय गर्नुको सामर्थ्य राख्दछ। यसै बुद्धिद्वारा त्यो अल्लाहको अन्य सृष्टिबाट लाभ उठाउँछ तथा उनीहरूलाई आफ्नो अधीन राख्दछ। यसै वुद्धि तथा समझबाट त्यो यस्ता भावनाहरूको निर्माण गर्दछ, यस्ता वस्तुहरूको खोजी गर्दछ, तथा यस्ता वस्तुहरूको उत्पादन गर्दछ, जो उसलाई गर्मीको वायुको तापबाट तथा जाडोको शीतबाट तथा ऋतुहरूका अन्य कठिनाईहरूबाट सुरक्षित राख्दछन्। यसका अतिरिक्त सृष्टिका सबै वस्तुलाई अल्लाह तआलाले मनुष्यको सेवामा लगाएको छ। चन्द्रमा, सूर्य, वायु, जल तथा अन्य अनगिन्ती वस्तुहरू छन् जसबाट मनुष्य लाभान्वित भइराखेको छ।

[२]स्थलमा त्यो घोडा, खच्चर, गधा, ऊँट तथा आफ्ना निर्मित सवारीहरू (रेलगाडी, बस, वायुयान, साइकल, मोटर आदि) मा सवारी गर्दछ तथा यसैप्रकार समुद्रमा डुङ्गा एवं जहाज छन् जसमाथि त्यो सवार हुन्छ तथा सामान ओसार-पसार गर्छ।

[३]मनुष्यलाई खानको निम्ति जुन अनाज़, फलफूल उसले उब्जाएको छ उनीहरूमा जुन-जुन स्वाद तथा स्वादिष्ट फल तथा शक्तिप्रद तथा हर्षवर्धक मिश्रित तथा पेय एवं माजून तथा खमीराहरू मनुष्यका अतिरिक्त कुनै अन्य सृष्टिलाई प्राप्त छ ?

[४]उक्त विवरणबाट मनुष्यको थुप्रै सृष्टिमाथि श्रेष्ठता एवं उच्चता स्पष्ट हुन्छ।

[५]इमामको अर्थ मुखिया, नेता तथा प्रतिनिधि हो, यहाँ यसबाट के तात्पर्य छ ? यसमा मतभेद छ। केही विद्वानहरू भन्दछन् कि यसबाट तात्पर्य पैग़म्बर हुन् अर्थात् प्रत्येक समुदायलाइ त्यसका पैग़म्बरको नामबाट पुकारिनेछ।

فَمَنْ أُوتِيَ كِتَٰبَهُۥ بِيَمِينِهِۦ فَأُو۟لَٰٓئِكَ يَقْرَءُونَ كِتَٰبَهُمْ وَلَا يُظْلَمُونَ فَتِيلًا ﴿٧١﴾

कर्मपत्र दाहिने हातमा दिइयो, उनी त (प्रसन्नताले) आफ्नो कर्मपत्र पढ्नेछन् । तथा धागो समान (कण बराबर) पनि अत्याचार गरिने छैनन् ।[1]

وَمَن كَانَ فِي هَٰذِهِۦٓ أَعْمَىٰ فَهُوَ فِي ٱلْءَاخِرَةِ أَعْمَىٰ وَأَضَلُّ سَبِيلًا ﴿٧٢﴾

(७२) तथा जो कोही यस लोकमा अन्धो रहयो, त्यो परलोक (आख़िरत) मा पनि अन्धो तथा मार्गबाट धेरै नै विचलित भएको रहनेछ ।[2]

وَإِن كَادُوا۟ لَيَفْتِنُونَكَ عَنِ ٱلَّذِىٓ أَوْحَيْنَآ إِلَيْكَ لِتَفْتَرِىَ عَلَيْنَا غَيْرَهُۥ ۖ وَإِذًا لَّٱتَّخَذُوكَ خَلِيلًا ﴿٧٣﴾

(७३) तथा यी मानिसहरू तपाईंलाई त्यस प्रकाशना (वह्यी) बाट, जुन हामीले तपाईंमाथि उतारेका छौं, विचलित गराइदिन चाहिराखेका थिए कि तपाईं यसका अतिरिक्त अन्य केही कुराहरू हाम्रो नामबाट रचिहाल्नुस्, अनि त तपाईंलाई आफ्ना संरक्षक तथा मित्र बनाउँथे ।

وَلَوْلَآ أَن ثَبَّتْنَٰكَ لَقَدْ كِدتَّ تَرْكَنُ إِلَيْهِمْ شَيْـًٔا قَلِيلًا ﴿٧٤﴾

(७४) तथा यदि हामी तपाईंलाई स्थिर (अडिग) नराखेको भए धेरै सम्भव थियो कि उनीहरूतिर

केही ज्ञाताहरू भन्छन् कि यसबाट आकाशीय पुस्तकहरू तात्पर्य हुन् जुन नवीहरूका साथ अवतरित हुँदैरहे अर्थात् हे तौरातवाला ! हे इंजीलवाला ! तथा हे कुर्आनवाला ! भनेर पुकारिनेछ, केही भन्दछन् कि यहाँ इमामबाट तात्पर्य कर्मपत्र हुन् अर्थात् प्रत्येक व्यक्तिलाई जब बोलाइनेछ त त्यसको कर्मपत्र त्यसको हातमा हुनेछ तथा त्यस अनुसार त्यसको निर्णय गरिनेछ । यसै विचारलाई इमाम शौकानी तथा इमाम इब्ने क़सीरले वरीयता दिएका छन् ।

[1](فتيلً) त्यस झिल्ली तथा धागोलाई भन्दछन्, जुन खजूरको बियाँमा (गुठली) मा हुन्छ, अर्थात् कण बराबर पनि अत्याचार हुनेछैन ।

[2](أعمىٰ) (अन्धो) बाट तात्पर्य हृदयको अन्धा हो अर्थात् जो संसारमा सत्य हेर्नु तथा सम्झनु एवं त्यसलाई स्वीकार गर्नुबाट बञ्चित रहयो, त्यो आख़िरतमा अन्धो र प्रभुको विशेष कृपा तथा उपकारबाट बञ्चित रहनेछ ।

केही न केही झुकि नै हाल्नुहुन्थ्यो ।[1]

(७५) त्यसपछि त हामीले पनि तपाईंलाई दोहोरो यातना संसारको दिन्थ्यौं तथा दोहोरो नै मृत्युका[2] अनि तपाईं त आफ्नो लागि हाम्रो अगाडी कसैलाई पनि सहायक पाउनु हुन्नथ्यो ।

إِذًا لَّأَذَقْنَٰكَ ضِعْفَ ٱلْحَيَوٰةِ وَضِعْفَ ٱلْمَمَاتِ ثُمَّ لَا تَجِدُ لَكَ عَلَيْنَا نَصِيرًا ﴿٧٥﴾

(७६) तथा यिनी त तपाईंका खुट्टा यस धर्तीबाट अस्थिर नै पार्न लागेका थिए ताकि तपाईंलाई यसबाट निकालिदिऊन्,[3] अनि यिनी पनि तपाईं पश्चात निकै कम टिक्न पाउँथे ।[4]

وَإِن كَادُوا۟ لَيَسْتَفِزُّونَكَ مِنَ ٱلْأَرْضِ لِيُخْرِجُوكَ مِنْهَا ۖ وَإِذًا لَّا يَلْبَثُونَ خِلَٰفَكَ إِلَّا قَلِيلًا ﴿٧٦﴾

(७७) यस्तै नियम उनीहरूको थियो, जो तपाईंभन्दा पूर्व रसूल (सन्देशवाहक) हामीले पठायौं ।[5] तथा तपाईं

سُنَّةَ مَن قَدْ أَرْسَلْنَا قَبْلَكَ مِن رُّسُلِنَا ۖ وَلَا تَجِدُ لِسُنَّتِنَا تَحْوِيلًا ﴿٧٧﴾

[1]यसमा त्यस पवित्रता (निष्पाप) को वर्णन छ जुन अल्लाहको तर्फबाट नबीहरूलाई प्राप्त हुन्छ । यसबाट यो ज्ञात भयो कि मूर्तिपूजक यद्यपि नबी सल्लल्लाहु अलैहि वसल्लमलाई आफूतिर आकर्षित गर्न चाहन्थे तर अल्लाहले तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई बचायो तथा तपाईं सल्लल्लाहु अलैहि वसल्लम अलिकति पनि उनीहरूतिर झुक्नु भएन ।

[2]यसबाट ज्ञात भयो कि दण्ड, पद एवं गरिमाको अनुसार हुन्छ ।

[3]यो त्यस षड्यन्त्रतिर संकेत छ, जुन नबी सल्लल्लाहु अलैहि वसल्लमलाई मक्काबाट निष्कासित गर्नको लागि मक्काका कुरैशले तयार गरेका थिए, जसबाट अल्लाहले उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई बचायो ।

[4]अर्थात् यदि आफ्नो योजना अनुसार यिनीहरू उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई मक्काबाट निकालदिएको भए, यिनी पनि त्यसको पश्चात धेरैबेरसम्म रहँदैनथे अर्थात् अल्लाहको प्रकोपको पकडमा आइहाल्थे ।

[5]अर्थात् यो प्राचीन नियम चलिआइराखेको छ जुन उहाँ सल्लल्लाहु अलैहि वसल्लम भन्दा पूर्वका रसूलहरूका लागि पनि लागू भइराखेको छ कि जब उनका समुदायले उनीहरूलाई आफ्नो देशबाट निकालिए अथवा उनीहरूलाई निस्कनको लागि बाध्य गरिदिए त फेरि त्यो समुदाय पनि अल्लाहको प्रकोपबाट सुरक्षित रहेनन् ।

हाम्रा नियमहरूमा कहिल्यै परिवर्तन पाउनु हुनेछैन ।[1]

(७८) नमाज़ स्थापित गर्नुस् अपरान्हदेखि रातको अँध्यारोसम्म[2] तथा प्रात: (फज्र) को कुर्आन पढ्नु पनि । नि:सन्देह प्रात: (फज्र) को समय कुर्आन पढ्नु उपस्थित गरिएको छ ।[3]

أَقِمِ الصَّلٰوةَ لِدُلُوكِ الشَّمْسِ إِلٰى غَسَقِ الَّيْلِ وَقُرْاٰنَ الْفَجْرِ ۖ إِنَّ قُرْاٰنَ الْفَجْرِ كَانَ مَشْهُودًا ﴿٧٨﴾

(७९) तथा रात्रिको केही भागमा तहज्जुदको नमाज़मा कुर्आनको पाठ (तिलावत गर्नु)[4] यो अधिकता

وَمِنَ الَّيْلِ فَتَهَجَّدْ بِهٖ نَافِلَةً لَّكَ ۖ

[1]अत: मक्कावासीहरूलाई पनि यही भयो कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको हिज़रत भएको डेढ वर्ष पश्चात नै उहाँलाई बद्रको मैदानमा अपमानजनक पराजयको सामना गर्नुपर्‍यो तथा ६ वर्ष पश्चात ८ हिज़रीमा मक्का नै विजय भयो तथा यस अपमान तथा अनादर पश्चात टाउको उचाल्ने योग्य रहेन ।

[2](دلوك) को अर्थ सूर्य ढल्किनु तथा (غسق) को अर्थ अन्धकार हो । सूर्य ढल्के पश्चात अपरान्ह ज़ोहर तथा अस्रको नमाज़ तथा रात्रिको अन्धकारसम्म सित तात्पर्य मग़रिव तथा इशाका नमाज़हरू हुन् तथा कुरआन अल-फज्रसित तात्पर्य फ़ज्रको नमाज़ हो । कुरआन नमाज़को अर्थमा छ । यसलाई कुरआनको उपमा यसकारणले दिइएको छ कि फज्रमा कुरआनका आयतहरूको पाठ लामो हुन्छ । यसप्रकार यस आयतमा पाँचौ अनिवार्य नमाज़हरूको वर्णन आउँछ, जसको विस्तृत वर्णन हदीसहरूमा पाईन्छ तथा जुन मुसलमानहरूको कर्मबाट पनि सिद्ध छ ।

[3]अर्थात् त्यस समय फरिश्ताहरू उपस्थित हुन्छन् बरु दिनका फरिश्ताहरू तथा रात्रिका फरिश्ताहरूको मिलन हुन्छ, जस्तो कि हदीसमा छ (सहीह बुख़ारी तफ़सीर सूर: बनी इस्राईल) एक अन्य हदीसमा छ कि रात्रिका फरिश्ता जब अल्लाह छेउ पुग्छन् त अल्लाह तआला उनीसित सोध्छ यद्यपि त्यो राम्ररी जान्दछ, तिमीले मेरा भक्तहरूलाई कुन अवस्थामा छोड्यौ । फरिश्ताहरू उत्तर दिन्छन् कि जब हामी उनका पास गएका थियौं, त्यस समय पनि उनी नमाज़ पढिराखेका थिए । जब हामी उनको पासबाट आएका छौं त उनीहरूलाई नमाज़ पढिराखेको अवस्थामा छाडेर आएका छौं । (सहीह बुख़ारी किताबुल मवाक़ीत बाब फ़ज़्ले सलातील अस्रे वा मुस्लिम बाबो सलाति स्सुब्हे वल अस्रे वल मुहाफ़ज़ते अलैहिमा)

[4]केही विद्वानहरू भन्छन् तहज्जुदका दुई प्रतिकूल अर्थ छन्, निद्रा तथा जागरण, यहाँ यसै दोस्रो अर्थमा छ कि राती सुतेर उठ्नुस् र ऐच्छिक नमाज़ पढ्नुस्, केही भन्दछन् कि तहज्जुदको मूल अर्थ त रात्रि सुत्नुकै हो तर तफ़अउलमा जानाले यसमा बच्नुको अर्थ उत्पन्न भयो । जस्तो (تأثم) को अर्थ हो, त्यो पापबाट बच अथवा अलग रह । यसैप्रकार

عَسَىٰٓ أَن يَبْعَثَكَ رَبُّكَ مَقَامًا مَّحْمُودًا ﴿٧٩﴾

तपाईंको लागि हो,[1] शीघ्र नै तपाईंको प्रभुले तपाईंलाई महमूद नामको स्थानमा उभ्याउने छ ।[2]

وَقُل رَّبِّ أَدْخِلْنِي مُدْخَلَ صِدْقٍ وَأَخْرِجْنِي مُخْرَجَ صِدْقٍ وَاجْعَل لِّي مِن لَّدُنكَ سُلْطَانًا نَّصِيرًا ﴿٨٠﴾

(८०) तथा विनय गर्दैरहनुस् कि हे मेरो प्रभु ! मलाई जहाँ लैजान्छौ, राम्रो तरिकाले लैजाउ तथा जहाँबाट निकाल्छौ, राम्रो प्रकारले निकाल तथा मेरो लागि आफ्नो तर्फबाट प्रभाव तथा सहायता निर्धारित गरिदेउ ।[3]

तहज्जुदको अर्थ हुनेछ सुत्नु (निद्रा) बाट बच्नु । तथा (متهجد) त्यो हुनेछ जो रात्रिका निद्राबाट बच्यो तथा नमाज़ पढ्यो । अत: तहज्जुदको भावार्थ रात्रिको अन्तिम भागमा उठेर ऐच्छिक नमाज़ पढ्नु हो । सम्पूर्ण रात्रि नमाज़ पढ्नु सुन्नतको विरूद्ध छ । नबी सल्लल्लाहु अलैहि वसल्लम रात्रिको प्रथम भागमा सुत्नु हुन्थ्यो तथा अन्तिम भागमा उठेर तहज्जुद पढ्नु हुन्थ्यो । यही विधि सुन्नत हो ।

[1]केही विद्वानहरूले यसको अर्थ यो लगाएका छन्, यो एउटा अतिरिक्त कर्तव्य हो, जुन उहाँ सल्लल्लाहु अलैहि वसल्लमको लागि विशेष छ, यसप्रकार उनी भन्छन् कि नबी सल्लल्लाहु अलैहि वसल्लमलाई तहज्जुद पनि त्यसरी नै अनिवार्य थियो, जसरी पाँच नमाज़ अनिवार्य थिए । तर मुसलमानहरूका लागि तहज्जुदको नमाज़ अनिवार्य छैन । केही विद्वानहरू भन्छन् कि (نافلة) अतिरिक्तको अर्थ यो हो कि यो तहज्जुदको नमाज़ उहाँ सल्लल्लाहु अलैहि वसल्लमको पदोन्नतिको लागि अतिरिक्त कुरो हो, किनभने उहाँ सल्लल्लाहु अलैहि वसल्लम त निष्पाप हुनुहुन्छ, जबकि मुसलमानहरूका लागि यो तथा अन्य पुण्यका कार्य नराम्रा कुराका प्रायश्चित हुनु । तथा केही विद्वान भन्दछन् कि (نافلة) नफ़िल: (ऐच्छिक) नै हो अर्थात न उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि अनिवार्य थियो न मुसलमानहरूमाथि, यो एउटा अतिरिक्त इबादत हो जसको महिमा नि:सन्देह अधिक छ तथा त्यस समय अल्लाह आफ्नो इवादतबाट अति प्रसन्न हुन्छ । परन्तु यो नमाज़ अनिवार्य तथा आवश्यक न नबी सल्लल्लाहु अलैहि वसल्लममाथि भएको थियो न उहाँ सल्लल्लाहु अलैहि वसल्लमका अनुयायीहरूमाथि नै अनिवार्य छ ।

[2]यो त्यो स्थान हो, जुन कयामतका दिन अल्लाह तआलाले नबी सल्लल्लाहु अलैहि वसल्लमलाई प्रदान गर्नेछ तथा त्यस स्थानमा नै उहाँ सल्लल्लाहु अलैहि वसल्लमले त्यो महा अभिस्तावना (सिफ़ारिश) गर्नु हुनेछ, जसको पश्चात मानिसहरूको लेखाजोखा हुनेछ ।

[3]केही विद्वान भन्छन् कि यो हिज़रतको अवसरमा अवतरित भयो जबकि उहाँ सल्लल्लाहु अलैहि वसल्लम मदीनामा प्रवेश गर्ने तथा मक्काबाट निस्कनुको समस्या थियो, केही भन्दछन् कि यसको अर्थ हो मलाई सत्यका साथ मृत्यु दिनु तथा सत्यका साथ

(८१) भनिदिनुस् कि सत्य आयो र असत्य विध्वस्त भयो । निःसन्देह असत्य थियो पनि ध्वस्त हुने योग्य ।[1]

وَقُلْ جَآءَ الْحَقُّ وَزَهَقَ الْبَاطِلُ ۚ إِنَّ الْبَاطِلَ كَانَ زَهُوقًا ﴿٨١﴾

(८२) तथा यो कुर्आन जुन हामी उतारिराखेका छौं, ईमान भएकाहरूका लागि अत्यन्त स्वास्थ्य एवं कृपा हो, अत्याचारीहरूलाइ क्षतिबाहेक कुनै अधिकता हुँदैन ।[2]

وَنُنَزِّلُ مِنَ الْقُرْآنِ مَا هُوَ شِفَآءٌ وَرَحْمَةٌ لِّلْمُؤْمِنِينَ ۙ وَلَا يَزِيدُ الظَّالِمِينَ إِلَّا خَسَارًا ﴿٨٢﴾

(८३) तथा मानवमाथि जब पनि हामी आफ्नो कृपा गर्दछौं, त त्यो मुख फर्काउन्छ तथा कोल्टो फेर्छ तथा जब उसलाई दुख हुन्छ त त्यो अत्तालिन्छ ।[3]

وَإِذَآ أَنْعَمْنَا عَلَى الْإِنسَانِ أَعْرَضَ وَنَأَىٰ بِجَانِبِهِ ۖ وَإِذَا مَسَّهُ الشَّرُّ كَانَ يَـُٔوسًا ﴿٨٣﴾

(८४) भनिदिनुस् कि प्रत्येक व्यक्ति आफ्नो विधि अनुसार कार्यरत छ, जो पूर्ण मार्ग-दर्शनमा

قُلْ كُلٌّ يَعْمَلُ عَلَىٰ شَاكِلَتِهِ فَرَبُّكُمْ

क़ेयामतका दिन उठाउनु । केही विद्वान भन्दछन् कि मलाई कब्रमा सत्यका साथ प्रवेश दिनु तथा क़ेयामतका दिन जब कब्रबाट उठाउँछौ त सत्यका साथ कब्रबाट निकाल्नु आदि । इमाम शौकानी भन्दछन् कि किनभने यो प्रार्थना हो यसकारण यसका सामान्य अर्थमा ती सबै कुरा आउँछन् ।

[1]हदीसमा वर्णित छ कि मक्का विजय पश्चात जब नबी सल्लल्लाहु अलैहि वसल्लमले "खान-ए-काअबा" मा प्रवेश गर्नुभयो, त त्यहाँ तीन सय साठी मूर्तिहरू थिए, उहाँ सल्लल्लाहु अलैहि वसल्लमको हातमा छडी थियो । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले छडीको टुप्पोले ती मूर्तिहरूलाई हान्दै जानु हुन्थ्यो तथा ﴿جَآءَ الْحَقُّ وَزَهَقَ الْبَاطِلُ﴾ तथा ﴿جَآءَ الْحَقُّ وَمَا يُبْدِئُ الْبَاطِلُ وَمَا يُعِيدُ﴾ पढ्दै जानुहुन्थ्यो । (सहीह बुख़ारी तफसीर बनी इस्राईल किताबुल मज़ालिम तथा मुस्लिम बाबु इज़ालतिल असनामे मिन हौलिल कअबः)

[2]यस भावार्थको आयत सूरः यूनुस-५७ मा गुज्रिसकेको छ, त्यसको व्याख्या हेर्नुस् ।

[3]यसमा मनुष्यको त्यस अवस्था एवं दशाको वर्णन छ जसमा साधारणतः सुख तथा दुखःको समयमा घेरिन्छ । सुखमा त्यो अल्लाहलाई बिर्सिदिन्छ तथा दुखमा निराश भईदिन्छ । तर ईमानवालाहरूको दशा दुबै परिस्थितिहरूमा यसभन्दा भिन्न छ । हेर्नुस् सूरः हूदको आयत ९ देखि ११ सम्मको व्याख्या ।

أَعْلَمُ بِمَنْ هُوَ أَهْدَىٰ سَبِيلًا ﴿٨٤﴾

छन्, उनीहरूलाई, तिम्रो प्रभु नै राम्ररी जान्दछ ।[1]

وَيَسْأَلُونَكَ عَنِ الرُّوحِ ۖ قُلِ الرُّوحُ مِنْ أَمْرِ رَبِّي وَمَا أُوتِيتُم مِّنَ الْعِلْمِ إِلَّا قَلِيلًا ﴿٨٥﴾

(८५) तथा यी मानिसहरू तपाईंसित आत्माको विषयमा प्रश्न गर्दछन्, (तपाईं) उत्तर दिनुस् कि आत्मा मेरो प्रभुको आदेशले छ तथा तिमीलाई जुन ज्ञान दिइएको छ, त्यो साह्रै नै अल्प छ ।[2]

وَلَئِن شِئْنَا لَنَذْهَبَنَّ بِالَّذِي أَوْحَيْنَا إِلَيْكَ ثُمَّ لَا تَجِدُ لَكَ بِهِ عَلَيْنَا وَكِيلًا ﴿٨٦﴾

(८६) तथा यदि हामी चाहन्छौं भने जुन प्रकाशना (वह्‌यी) तपाईंतिर हामीले अवतरित गरेका छौं, सबै लिन सक्छौं,[3] अनि तपाईंलाई त्यसको लागि हाम्रो समक्ष कोही पनि पक्षधर पाउन सकिने छैन ।[4]

[1]यसमा मूर्तिपूजकहरूका लागि धम्की तथा चेतावनी छ तथा यसको त्येही भावार्थ हो, जुन सूरः हूदको आयत १२१ तथा १२२ को हो (شاكلة) को अर्थ विचार, धर्म, विधि तथा व्यवहार एवं स्वभावसित छ । केही विद्वानहरू भन्छन् कि यसमा काफिरहरूका लागि निन्दा तथा ईमानवालाहरूका लागि प्रशंसाको पक्ष छ किनभने यसको अर्थ हो कि प्रत्येक मनुष्य यस्तो कर्म गर्दछ, जुन त्यसको त्यस व्यवहार तथा चरित्रमा आधारित हुन्छ, जुन त्यसको स्वभाव एवं रीति हुन्छ ।

[2]प्राण (आत्मा) त्यो सूक्ष्म वस्तु हो जुन कसैलाई देखिंदैन तर प्रत्येक जीवधारीको शक्ति तथा बल त्यसै आत्मामा नीहित छ । यसको यथार्थत तथा सत्य के हो ? यो कोही पनि जान्दैन । यहूदीहरूले एकपटक नबी सल्लल्लाहु अलैहि वसल्लमसित यसको विषयमा सोधे तब यो आयत अवतरित भयो । (सहीह बुख़ारी तफ़सीर सूरः बनी इस्राईल तथा सहीह मुस्लिम किताब सिफ़तिल कियामः वल जन्नः वन नार बाबु सोवा लिल यहूदिन् नबीय सल्लल्लाहु अलैहि वसल्लम अनिर रूह) आयतको अर्थ यो हो कि तिम्रो ज्ञान अल्लाहको ज्ञानको सापेक्ष तुच्छ छ, तथा यो आत्मा जसको विषयमा तिमी सोधिराखेका छौ यसको ज्ञान त अल्लाहले नबीहरू सहित कसैलाई पनि दिएन । बस यति मात्र बुझ कि यो मेरो प्रभुको आदेश हो अथवा मेरो प्रभुका महिमा मध्ये हो, जसको वास्तविकता मात्र त्यही जान्दछ ।

[3]अर्थात् प्रकाशना (वह्‌यी) द्वारा जुन अलिकति ज्ञान दिइएको छ यदि अल्लाह तआला चाहन्छ भने त्यसलाई पनि खोस्न सक्छ अर्थात् हृदयबाट मेटाउन सक्छ अथवा किताबबाट नै मेटाउन सक्दछ ।

[4]जुन पुनः त्यसै प्रकाशना (वह्‌यी) लाई तपाईं सल्लल्लाहु अलैहि वसल्लमतिर फर्काइदेओस् ।

(८७) यो त मात्र तपाईंको प्रभुको दयालुता हो ।[1] निःसन्देह तपाईंमाथि उसको अति उपकार छ ।

إِلَّا رَحْمَةً مِّن رَّبِّكَ ۚ إِنَّ فَضْلَهُۥ كَانَ عَلَيْكَ كَبِيرًا ﴿٨٧﴾

(८८) भनिदिनुस् कि यदि सबै मानव तथा जिन्नात एकत्रित भई यस कुरआन समान ल्याउन चाहन्छन् भने ती सबैबाट यसको समतुल्य ल्याउन असम्भव छ, यद्यपि उनीहरू आपसमा एक-अर्काका सहायक नै किन नहोऊन् ।[2]

قُل لَّئِنِ ٱجْتَمَعَتِ ٱلْإِنسُ وَٱلْجِنُّ عَلَىٰٓ أَن يَأْتُوا۟ بِمِثْلِ هَٰذَا ٱلْقُرْءَانِ لَا يَأْتُونَ بِمِثْلِهِۦ وَلَوْ كَانَ بَعْضُهُمْ لِبَعْضٍ ظَهِيرًا ﴿٨٨﴾

(८९) तथा हामीले त यस कुरआनमा मानिसहरूद्वारा बुझ्नका निम्ति प्रत्येकरुपले सबै उदाहरण वर्णन गरिदिएका छौं, तर अधिकतर मानिसहरू कृतघ्नताबाट रोकिन्नन् ।[3]

وَلَقَدْ صَرَّفْنَا لِلنَّاسِ فِى هَٰذَا ٱلْقُرْءَانِ مِن كُلِّ مَثَلٍ فَأَبَىٰٓ أَكْثَرُ ٱلنَّاسِ إِلَّا كُفُورًا ﴿٨٩﴾

(९०) तथा उनीहरूले भने[4] कि हामी तपाईंमाथि कहिल्यै ईमान कायम गर्दैनौं जबसम्म तपाईंले हाम्रो लागि धर्तीबाट जलस्रोत निकालिदिनु हुन्न ।

وَقَالُوا۟ لَن نُّؤْمِنَ لَكَ حَتَّىٰ تَفْجُرَ لَنَا مِنَ ٱلْأَرْضِ يَنۢبُوعًا ﴿٩٠﴾

(९१) अथवा स्वयं तपाईंको लागि खजूर तथा अंगूरको कुनै बगैंचा होस् र तपाईं त्यसबीच धेरै नहरहरू बगाएर देखाइदिनुस् ।

أَوْ تَكُونَ لَكَ جَنَّةٌ مِّن نَّخِيلٍ وَعِنَبٍ فَتُفَجِّرَ ٱلْأَنْهَٰرَ خِلَٰلَهَا تَفْجِيرًا ﴿٩١﴾

(९२) अथवा तपाईं आकाशलाई हामीमाथि खण्ड-खण्ड गरी खसाल्नुस् जस्तो कि तपाईंको विचार

أَوْ تُسْقِطَ ٱلسَّمَآءَ كَمَا زَعَمْتَ عَلَيْنَا

[1]कि उसले अवतरित गरिएको प्रकाशना (वह्यी) लाई मेटाएन अथवा अल्लाहको प्रकाशना (वह्यी) बाट तपाईंलाई सम्मानित गऱ्यो ।

[2]पवित्र कुरआन मजीदसित सम्बन्धित यो (चुनौती) पहिला पनि कैयन् स्थानहरूमा गुज्रिसकेको छ । यो चुनौती अहिलेसम्म उत्तरको खोजीमा छ ।

[3]यो आयत यसै सूरःको प्रारम्भमा पनि गुज्रिसकेको छ ।

[4]ईमान कायम गर्नका लागि मक्काका कुरैशहरूले यी माँग प्रस्तुत गरे ।

كِسَفًا أَوْ تَأْتِيَ بِاللَّهِ وَالْمَلَٰٓئِكَةِ قَبِيلًا ﴿٩٢﴾

छ, अथवा तपाईं स्वयं अल्लाह (तआला) लाई तथा फरिश्ताहरूलाई हाम्रा समक्ष उभ्याइदिनुस् ।[1]

أَوْ يَكُونَ لَكَ بَيْتٌ مِّن زُخْرُفٍ أَوْ تَرْقَىٰ فِي السَّمَآءِ وَلَن نُّؤْمِنَ لِرُقِيِّكَ حَتَّىٰ تُنَزِّلَ عَلَيْنَا كِتَٰبًا نَّقْرَؤُهُۥ قُلْ سُبْحَانَ رَبِّي هَلْ كُنتُ إِلَّا بَشَرًا رَّسُولًا ﴿٩٣﴾

(९३) अथवा तपाईंको लागि आफ्नो कुनै स्वर्णको घर[2] होस् अथवा तपाईं आकाशमा उक्लिनुस्, र हामी तपाईंको उक्लिने कुरोलाई पनि त्यस समयसम्म विश्वास गर्ने छैनौं जबसम्मकि तपाईंले हाम्रो लागि कुनै किताब उतारेर ल्याउनु हुन्न, जसलाई हामीले स्वयं पढ्न सकौं,[3] तपाईं उत्तर दिनुस् कि मेरो पालनकर्ता पवित्र छ, म त एउटा मानव पुरूष हूँ जो रसूल (सन्देशवाहक) बनाइएको हूँ ।[4]

وَمَا مَنَعَ النَّاسَ أَن يُؤْمِنُوٓا

(९४) तथा मानिसहरूको पासमा मार्गदर्शन पुगिसके पश्चात ईमानबाट रोक्ने कुरा केवल

---

[1]अर्थात् हाम्रा सम्मुख आएर उभियून् तथा हामीले उनलाई आफ्नै आँखाले हेरौं ।

[2](زخرف) को वास्तविक अर्थ शोभा हो । (مزخرف) शोभित कुरोलाई भन्दछन् । तर यहाँ यसको अर्थ स्वर्ण हो ।

[3]अर्थात् हामीमध्ये प्रत्येक व्यक्ति त्यसलाई प्रष्टरूपले स्वयं पढ्न सकोस् ।

[4]अर्थ यो हो कि मेरो प्रभुमा त हरेक प्रकारको शक्ति छ, त्यसले चाहेको अवस्थामा तिम्रा माँग एक क्षणमै कुन (كن) शब्दबाट नै पूरा गर्नसक्छ । परन्तु जहाँसम्म मेरो सम्बन्ध छ म त (तिमी सरह) एउटा मनुष्य हूँ । के कुनै मानिस यी वस्तुहरूको सामर्थ्य राख्दछ कि मसित यिनका माँग गर्दछौ ? हो, म यसको साथ अल्लाहको रसूल पनि हूँ । तर रसूलको कार्य मात्र अल्लाहको सन्देश पुऱ्याउनु हो, त त्यो मैले पुऱ्याइराखेको छु । मानिसहरूको माँगमा चमत्कार देखाउनु यो रिसालतको भाग होइन । यदि अल्लाह चाहन्छ भने रिसालतको सत्यताको लागि एकाध चमत्कार देखाइन्छ, तर यदि मानिसहरूको इच्छामा चमत्कार देखाउन प्रारम्भ गरिन्छ भने यो श्रृङ्खला कहिले समाप्त हुने छैन, प्रत्येक व्यक्ति आफ्नो इच्छा अनुसार नयाँ चमत्कार हेर्ने इच्छा गर्दछ तथा रसूल मात्र यसै काममा लागिरहने छ, धर्मको शिक्षा एवं आमन्त्रण दिनुको मूल कार्य रोकिने छ । यसकारण चमत्कार घटित हुने कुरो केवल अल्लाहकै इच्छामा निर्भर छ, जसको ज्ञान त्यसको अतिरिक्त कसैलाई छैन । म पनि त्यसको इच्छामा हस्तक्षेप गर्नुको अधिकारी छैन ।

إِذْ جَآءَهُمُ ٱلْهُدَىٰٓ إِلَّآ أَن قَالُوٓا۟ أَبَعَثَ ٱللَّهُ بَشَرًا رَّسُولًا ﴿٩٤﴾

यही मात्र रहेको छ कि उनीहरूले भने, के अल्लाहले एउटा मानव पुरूषलाई नै रसूल बनाएर पठायो ?[1]

قُل لَّوْ كَانَ فِى ٱلْأَرْضِ مَلَٰٓئِكَةٌ يَمْشُونَ مُطْمَئِنِّينَ لَنَزَّلْنَا عَلَيْهِم مِّنَ ٱلسَّمَآءِ مَلَكًا رَّسُولًا ﴿٩٥﴾

(९५) (तपाईं) भनिदिनुस् कि यदि धर्तीमा फरिश्ताहरू हिंड्डुल तथा निवास गरेका भए, त हामीले पनि उनको पासमा कुनै आकाशीय फरिश्तालाई नै रसूल बनाएर पठाउँथ्यौं ।[2]

قُلْ كَفَىٰ بِٱللَّهِ شَهِيدًۢا بَيْنِى وَبَيْنَكُمْ ۚ إِنَّهُۥ كَانَ بِعِبَادِهِۦ خَبِيرًۢا بَصِيرًا ﴿٩٦﴾

(९६) भनिदिनुस् कि मेरो र तिम्रो बीचमा अल्लाह साक्षी हुनु पर्याप्त छ ।[3] त्यो आफ्ना भक्तहरूसित राम्ररी परिचित छ एवं राम्रो प्रकारले देख्दछ ।

وَمَن يَهْدِ ٱللَّهُ فَهُوَ ٱلْمُهْتَدِ ۖ وَمَن يُضْلِلْ فَلَن تَجِدَ لَهُمْ أَوْلِيَآءَ مِن دُونِهِۦ ۖ وَنَحْشُرُهُمْ يَوْمَ ٱلْقِيَٰمَةِ عَلَىٰ وُجُوهِهِمْ عُمْيًا وَبُكْمًا وَصُمًّا ۖ مَّأْوَىٰهُمْ

(९७) तथा अल्लाह जसको मार्ग-दर्शन गर्दछ, त्यो मार्ग प्राप्त छ तथा जसलाई त्यसले मार्गबाट विचलित गर्दछ, त असम्भव छ कि तिमी त्यसको मित्र त्यसको अतिरिक्त अन्यलाई पाउन सक ।[4] यस्ता मानिसहरूलाई हामी क़ेयामतको दिन घोप्टो परेको अवस्थामा एकत्रित

[1]अर्थात् कुनै मनुष्य रसूल हुने कुरो काफ़िर तथा मूर्तिपूजकहरूका लागि अत्यन्त आश्चर्यको कुरो थियो, उनीहरूले यो कुरो मानिराखेका थिएनन् कि हामी जस्तो व्यक्ति, जो हामीजस्तै हिंड्डुल गर्छ, हामी जस्तै खान्छ, पिउँछ, हामी समान व्यक्तिगत सम्बन्धहरूसित सम्बन्धित छ, त्यो रसूल बनोस् । यो आश्चर्य उनीहरूको ईमान स्थापनामा बाधक थियो ।

[2]अल्लाह तआलाले भन्यो जब धर्तीमा मनुष्य बस्दछन्, त तिनका मार्ग-दर्शनका लागि रसूल पनि मनुष्य हुनेछन् । अमानुष रसूल, मनुष्यको मार्ग-दर्शनको कर्तव्य पूरा गर्न सक्दैन । हो, यदि धर्तीमा फरिश्ता वसेका भए तिनका लागि रसूल पनि अवश्य फरिश्ता हुन्थे ।

[3]अर्थात् ममाथि जुन धर्मको आदेश पुऱ्याउने अभिभारा थियो, त्यो मैले पुऱ्याइदिए, यस विषयमा मेरो र तिम्रो बीच अल्लाह साक्षी हुनु पर्याप्त छ, किनभने हरेक कुरोको निर्णय उसैको हातमा छ ।

[4]मैले सतर्क गर्न तथा निर्देशन दिनुबाट कसले ईमान स्थापित गर्छ, कसले गर्दैन, यो पनि अल्लाहको अधिकारमा छ, मेरो कार्य मात्र सन्देश पुऱ्याउनु हो ।

गर्नेछौं ।[1] जबकि उनीहरू अन्धा, लाटा तथा बहिरा हुनेछन् ।[2] उनको वासस्थान नरक हुनेछ । जतिखेर त्यो निभ्न लागेको हुनेछ हामीले उनका लागि झन् प्रज्वलित गरिदिनेछौं ।

جَهَنَّمُ كُلَّمَا خَبَتْ زِدْنٰهُمْ سَعِيْرًا ﴿٩٧﴾

(९८) यी सबै हाम्रा निशानीहरूलाई अस्वीकार गर्नु तथा यो भन्नुको परिणाम हो कि के जब हामी अस्थीहरू तथा कण-कण भइसकेका हुनेछौं, फेरि हामी नौजात गरिएर उभ्याइनेछौं ।[3]

ذٰلِكَ جَزَآؤُهُمْ بِاَنَّهُمْ كَفَرُوْا بِاٰيٰتِنَا وَقَالُوْٓا ءَاِذَا كُنَّا عِظَامًا وَّرُفَاتًا ءَاِنَّا لَمَبْعُوْثُوْنَ خَلْقًا جَدِيْدًا ﴿٩٨﴾

(९९) त के उनीहरूले यस कुरामा ध्यान दिएनन् कि जुन अल्लाहले आकाश तथा धर्तीलाई पैदा गरेको छ, त्यो यिनीहरू जस्तालाई सृष्टि गर्न पूर्ण सामर्थ्य राख्दछ ।[4] उसैले उनका लागि

اَوَلَمْ يَرَوْا اَنَّ اللّٰهَ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ قَادِرٌ عَلٰٓى اَنْ يَّخْلُقَ مِثْلَهُمْ وَجَعَلَ لَهُمْ اَجَلًا

---

[1]हदीसमा वर्णन गरिएको छ कि सहाबा किराम (नबीका सहचर) ले आश्चर्यको प्रदर्शन गरे कि घोप्टो परेको अवस्था कुन प्रकारको हश्र हुनेछ.? नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : "जुन अल्लाहले उनीहरूलाई खुट्टाले हिंड्नुको शक्ति प्रदान गरेको छ, त्यसले यस कुराको पनि सामर्थ्य राख्दछ कि त्यसले उनलाई टाउको टेकाई हिंडाइ देओस् ।" (सहीह बुख़ारी सूरः अल-फ़ुरक़ान तथा सहीह मुस्लिम सिफ़तुल क़ियामः वल जन्नः वल नार बाब युहशरूल काफ़िरो अला-वज्हेही)

[2]अर्थात् जुनप्रकार उनी संसारमा सत्यको विषयमा अन्धा, बहिरा तथा लाटा बनिरहे, प्रलय (क़ेयामत) का दिन दण्ड स्वरूप अन्धा, बहिरा तथा लाटा हुनेछन् ।

[3]अर्थात् नरकको यो दण्ड उनीहरूलाई यसकारण दिइने छ कि उनीहरूले हाम्रा अवतरित आयतहरूलाई मानेनन् तथा सृष्टिमा फैलिएका निशानीहरूमाथि विचार गरेनन्, जसका कारण उनीहरूले क़ेयामत तथा मृत्यु पश्चात जीवित गरिनुमाथि आश्चर्य व्यक्त गरे तथा भने कि हाडखोर तथा कण-कण भईहाले पश्चात हामीलाई एउटा नयाँ जीवन कसरी प्राप्त हुनसक्छ ?

[4]अल्लाह तआलाले उनीहरूको उत्तर दियो कि जुन अल्लाह आकाश तथा धर्तीको स्रष्टा हो, त्यो उनीहरू जस्तालाई पैदा गर्न अथवा पुनः उनीहरूलाई जीवन दिन सामर्थ्य राख्दछ, किनभने यो आकाश तथा धर्तीको उत्पत्तिभन्दा धेरै सरल छ ।

لَا رَيْبَ فِيهِ فَأَبَى الظَّٰلِمُونَ إِلَّا كُفُورًا ﴿٩٩﴾

एउटा यस्तो समय निर्धारित गरेको छ, जुन शंका तथा संदेहबाट पूर्णत: शून्य छ,[1] तर अन्यायीहरू कृतघ्न नबनी रहँदैनन् ।

قُلْ لَوْ أَنْتُمْ تَمْلِكُونَ خَزَآئِنَ رَحْمَةِ رَبِّيٓ إِذًا لَّأَمْسَكْتُمْ خَشْيَةَ الْإِنْفَاقِ ۚ وَكَانَ الْإِنْسَانُ قَتُورًا ﴿١٠٠﴾

(१००) भनिदिनुस् कि यदि मानौं तिमी मेरो प्रभुका कृपाहरूको कोषको स्वामी बनेको भए तिमी त्यस समय पनि त्यसको व्यय हुने भयले[2] त्यसमा कन्जुसी गर्दथ्यौ तथा मनुष्य छ नै संकीर्ण हृदय ।

﴿لَخَلْقُ السَّمَٰوَٰتِ وَالْأَرْضِ أَكْبَرُ مِنْ خَلْقِ النَّاسِ﴾

"आकाश तथा धर्तीको उत्पत्ति मनुष्यहरूको उत्पत्तिभन्दा धेरै कठिन कार्य हो ।" (सूर: अल-मोमिन-५७)

यसै विषयलाई अल्लाह तआलाले सूर: अल-अहक़ाफ-३३ मा तथा सूर: यासीन-८१ तथा ८२ मा पनि वर्णन गरिएको छ ।

[1]यस निर्धारित समयबाट तात्पर्य मृत्यु अथवा क़ेयामत हो । यहाँ पूर्व वाक्य अनुसार 'क़ेयामत' तात्पर्य लिनु धेरै उचित छ, अर्थात हामीले उनीहरूलाई पुन: जीवित पारी चिहानहरूबाट उठाउनको निम्ति एउटा समय निर्धारित गरेका छौं ।

﴿وَمَا نُؤَخِّرُهُ إِلَّا لِأَجَلٍ مَّعْدُودٍ﴾

"हामीले उनको मामिलालाई एक निर्धारित समय सम्मका लागि पर सारिराखेका छौं । (सूर: हूद-१०४)

[2](خشية الإنفاق) को अर्थ हो (خشية أن ينفقوا فيفتقروا) "यस भयले कि व्यय गरी समाप्त गरिहाल्नेछन्, त्यसको पश्चात निर्धन हुनेछन् ।" यद्यपि यो अल्लाहको कोष हो, जुन समाप्त हुने होइन । तर मनुष्य संकीर्ण हृदयको सिद्ध भएको छ, यसकारण कन्जुसीले काम लिन्छ । अन्य स्थानमा अल्लाह तआलाले भन्नुभयो :

﴿أَمْ لَهُمْ نَصِيبٌ مِّنَ الْمُلْكِ فَإِذًا لَّا يُؤْتُونَ النَّاسَ نَقِيرًا﴾

"उनीहरूलाई यदि अल्लाहको राज्य मध्ये केही भाग प्राप्त हुन्छ भने यिनी मानिसहरूलाई केही दिंदैनन् ।" (सूर: अल-निसा-५३)

(نقير) खजूरको गुठलीमा जुन चिराजस्तो हुन्छ, त्यसलाई भन्दछन्, अर्थात् तिल बराबर पनि कसैलाई दिदैंनन् । यो त अल्लाहको कृपा हो तथा उसको उपकार एवं दया हो कि उसले आफ्ना भण्डारहरुका मुख मानिसहरुका निम्ति

وَلَقَدْ اٰتَيْنَا مُوْسٰى تِسْعَ اٰيٰتٍۢ بَيِّنٰتٍ فَسْـَٔلْ بَنِيْٓ اِسْرَاۗءِيْلَ اِذْ جَاۗءَهُمْ فَقَالَ لَهٗ فِرْعَوْنُ اِنِّىْ لَاَظُنُّكَ يٰمُوْسٰى مَسْحُوْرًا ﴿١٠١﴾

(१०१) तथा हामीले मूसालाई नौ स्पष्ट चमत्कार[1] प्रदान गर्‍यौं, तिमी स्वयं इस्राईलको सन्तानसित सोध कि जब उनी तिनीहरूको पासमा पुगे त फ़िरऔनले भन्यो कि हे मूसा ! मेरो विचारमा तिमीमाथि जादू गरिएको छ ।

قَالَ لَقَدْ عَلِمْتَ مَآ اَنْزَلَ هٰٓؤُلَاۗءِ اِلَّا رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ بَصَاۗىِٕرَ ۚ وَاِنِّىْ لَاَظُنُّكَ يٰفِرْعَوْنُ مَثْبُوْرًا ﴿١٠٢﴾

(१०२) (मुसा) ले उत्तर दिए कि यो त तिमीलाई ज्ञात भइसकेको छ कि आकाशहरू तथा धर्तीको प्रभुले नै यी चमत्कार देखाउन तथा सम्झाउनका लागि उतारेको छ, हे फ़िरऔन ! मलाई लागिराखेको छ कि निःसन्देह तिमीलाई नाश गरिदिइएको छ ।

فَاَرَادَ اَنْ يَّسْتَفِزَّهُمْ مِّنَ الْاَرْضِ

(१०३) (अन्त्यमा) फ़िरऔनले दृढ निश्चय गर्‍यो कि उनलाई धर्तीबाट नै समाप्त गरिदिओस्,

खोलिदिएको छ, जुनप्रकार हदीसमा वर्णित छ, "अल्लाहका हात भरिएका छन् । त्यो रात-दिन खर्च गर्दछ, तर त्यसमा कुनै कमी आउँदैन । एकछिन हेर्नुस् त, जबदेखि आकाश तथा धर्ती उसले उत्पन्न गरेको छ, कति खर्च गरे होला । तर उसको हातमा जे-जति छ, त्यसमा कमी छैन (तिनी परिपूर्ण छन्) ।" (सहीह बुख़ारी, किताबुल तौहीद बावु व कान अर्शेहु अल्लमाए तथा सहीह मुस्लिम किताबुल जकात बाबुल हस्से अलल् नफ्क़ः व तवशीरुल मुनाफिक बिल खलफ) हस्सेनफ़्क़ः व तवशीरूल मुनाफ़िक़ बिल ख़ल्फ)

[1]ती नौं चमत्कार हातको ज्योतिर्मय हुनु, लट्ठीको विभिन्न रूपले प्रयोग, अकाल, फलहरूको कमी, हुरी, टिड्डी दल (सलह) को आक्रमण, उँडुस तथा जुम्राको अधिकता हुनु, भ्यागुता तथा रगत । इमाम हसन बसरी भन्नुहुन्छ कि अकाल तथा फलहरूको कमी एउटै कुरो तथा नवौं चमत्कार लट्ठी अजिङ्गर बनी जादूगरहरूको जादू निलिहाल्नु हो । आदरणीय मूसालाई यिनका अतिरिक्त पनि चमत्कार प्रदान गरिएका थिए, जस्तै लट्ठीबाट पत्थरमा प्रहार गर्नुबाट बाह्रवटा पानीका स्रोत निस्केका थिए, बादलहरूको छायाँ गर्नु, मन्न एवं सलवा आदि, तर यहाँ नौं निशानीहरूसित तात्पर्य त्यही नौं चमत्कार हुन् जसको प्रदर्शन फ़िरऔन तथा त्यसका अनुयायीहरूले पनि गरे । यसैकारण आदरणीय इब्ने अब्बासले समुद्र च्यातिएर मार्ग बन्नु पनि चमत्कारमा सम्मिलित गर्नु भएको छ तथा अकाल एवं फलहरूको कम उत्पादनलाई एउटै चमत्कार मान्नु भएको छ । तिर्मिजीको एउटा कथनमा नौं चमत्कारहरूको विस्तृत वर्णन यसभन्दा भिन्न गरिएको छ । तर प्रमाणबाट त्यो कथन क्षीर्ण छ, यसकारण नौं चमत्कारबाट तात्पर्य यिनै वर्णित चमत्कार हुन् ।

فَأَغْرَقْنَٰهُ وَمَن مَّعَهُۥ جَمِيعًا ۝١٠٣

त हामीले स्वयं उसलाई तथा उसका सम्पूर्ण साथीहरूलाई डुबाइदियौं ।

وَقُلْنَا مِنۢ بَعْدِهِۦ لِبَنِىٓ إِسْرَٰٓءِيلَ ٱسْكُنُوا۟ ٱلْأَرْضَ فَإِذَا جَآءَ وَعْدُ ٱلْـَٔاخِرَةِ جِئْنَا بِكُمْ لَفِيفًا ۝١٠٤

(१०४) तथा त्यस पश्चात हामीले इस्राईलका पुत्रहरूसित भन्यौं कि त्यस धर्ती[1] मा तिमी बसोबास गर । हो, जब आखिरतको वचन आउनेछ, हामीले तिमी सबैलाई समेटेर तथा एकत्रित गरी ल्याउनेछौं ।

وَبِٱلْحَقِّ أَنزَلْنَٰهُ وَبِٱلْحَقِّ نَزَلَ ۗ وَمَآ أَرْسَلْنَٰكَ إِلَّا مُبَشِّرًا وَنَذِيرًا ۝١٠٥

(१०५) तथा हामीले यस (कुरआन) लाई सत्यताकासाथ अवतरित गर्‍यौं[2] र सत्यका साथ यो अवतरित पनि भयो । तथा हामीले तपाईंलाई मात्र सूचना दिने तथा सतर्क गर्ने बनाएर पठाएका छौं ।[3]

وَقُرْءَانًا فَرَقْنَٰهُ لِتَقْرَأَهُۥ عَلَى ٱلنَّاسِ

(१०६) तथा कुरआनलाई हामीले अलि-अलि गरी यसकारण अवतरित गरेका छौं,[4] ताकि तपाईं यसलाई समय

[1]जस्तो कि विदित हुन्छ, यस धर्तीसित तात्पर्य मिश्र हो जसबाट फ़िरऔनले मूसा तथा उनका अनुयायीहरूलाई निष्कासनको विचार गरेको थियो । तथा इस्राईलका सन्तानको, इतिहास साक्षी छ कि उनी मिश्रबाट निस्के पश्चात पुन: मिश्र गएनन्, बरु चालीस वर्ष "तीह" को मैदानमा व्यतीत गरी फ़िलस्तीनमा प्रवेश गरे यसको प्रमाण सूर: अल-आराफ आदिमा कुरआनको वर्णनबाट पनि थाहा हुन्छ । यसकारण उचित यही छ कि यसबाट तात्पर्य फ़िलस्तीनको धर्ती हो ।

[2]अर्थात् सुरक्षित तपाईंसम्म पुग्यो, यसमा मार्गमा कुनै कमी अधिकता तथा कुनै परिवर्तन एवं मिश्रण गरिएन, किनभने यसलाई ल्याउने फरिश्ता शक्तिशाली, ईमान्दार तथा दृढ फरिश्ता मानिएको छ । यी ती गुणहरू हुन् जुन आदरणीय जिब्रीलको सम्बन्धमा कुरआनमा वर्णित गरिएका हुन् ।

[3](مبشر) (शुभसूचक) निष्ठावानहरूका लागि तथा (نذير) (त्रासक) अवज्ञाकारिहरूका लागि ।

[4](فرقناه) को एउटा अन्य अर्थ (بيناه) तथा (أوضحناه) (हामीले त्यसलाई खुल्ला गरी अथवा स्पष्टरूपले वर्णित गरिदिएका छौं) पनि गरिएका हुन् ।

عَلٰى مُكۡثٍ وَّنَزَّلۡنٰهُ تَنۡزِيۡلًا ﴿١٠٦﴾

प्राप्त गरी मानिसहरूलाई सुनाउनुस् तथा हामीले स्वयं पनि यसलाई थोरै-थोरै गरी उतार्‍यौं ।

قُلۡ اٰمِنُوۡا بِهٖۤ اَوۡ لَا تُؤۡمِنُوۡا ؕ اِنَّ الَّذِيۡنَ اُوۡتُوا الۡعِلۡمَ مِنۡ قَبۡلِهٖۤ اِذَا يُتۡلٰى عَلَيۡهِمۡ يَخِرُّوۡنَ لِلۡاَذۡقَانِ سُجَّدًا ۙ﴿١٠٧﴾

(१०७) भनिदिनुस्, तिमी यसमाथि ईमान स्थापित गर अथवा नगर, जसलाई यसभन्दा पूर्व ज्ञान प्रदान गरिएको छ, उनी छेउ जहिले पनि यसलाई पढिन्छ, त चिउडो टेकी दण्डवत् (सजदा) गर्न थाल्छन् ।[1]

وَّيَقُوۡلُوۡنَ سُبۡحٰنَ رَبِّنَاۤ اِنۡ كَانَ وَعۡدُ رَبِّنَا لَمَفۡعُوۡلًا ﴿١٠٨﴾

(१०८) तथा भन्दछन् कि हाम्रो प्रभु पवित्र छ, हाम्रो प्रभुको वचन निःसन्देह पूर्ण भएर नै रहन्छ ।[2]

وَيَخِرُّوۡنَ لِلۡاَذۡقَانِ يَبۡكُوۡنَ وَيَزِيۡدُهُمۡ خُشُوۡعًا ۩ ﴿١٠٩﴾

(१०९) तथा उनीहरू चिउडो टेकी रूदै दण्डवत् (सजदा) स्थितिमा घोप्टिन्छन् तथा यो कुर्आन उनीहरूको विनम्रता तथा विनय झन् बढाइदिन्छ ।[3]

[1]अर्थात् ती विद्वान जसले कुर्आनको अवतरणभन्दा पूर्व प्राचीन पुस्तकहरू पढेका छन् तथा उनीहरू प्रकाशना (वह्यी) को वास्तविकता तथा रिसालतको लक्षणसित परिचित छन्, ती नतमस्तक हुन्छन्, यस कुरामा अल्लाहको कृतज्ञता व्यक्त गर्दै कि उनीहरूलाई अन्तिम रसूलको पहिचानको सन्मति दियो तथा कुर्आन एवं रिसालतमा ईमान (विश्वास) को सौभाग्य प्रदान गर्‍यो ।

[2]अर्थ यो हो कि यी मक्काका काफिर जो प्रत्येक कुरासित अपरिचित छन्, यदि यिनीहरू ईमान कायम गर्दैनन् भने तपाईं सल्लल्लाहु अलैहि वसल्लम चिन्ता नगर्नुहोस् यसकारण कि जो ज्ञानी छन् तथा प्रकाशना (वह्यी) तथा रिसालतको वास्तविकतासित राम्ररी परिचित छन्, उनीहरू यसमाथि ईमान स्थापित गरेका छन्, बरु कुर्आन सुनेर अल्लाहको सदनमा नत्मस्तक भएका छन् । तथा यसको पवित्रताको वर्णन गर्दछन् एवं प्रभुको वचनमा विश्वास राख्दछन् ।

[3]चिउडो टेकी घोप्टो पर्नुको पुनरावृत्ति छ, किनभने प्रथम दण्डवत् अल्लाहको महिमा तथा सम्मानको लागि कृतज्ञताको रूपमा थियो तथा कुर्आन सुनेर उनमा जुन भय तथा भाव जागृत भए तथा त्यसका प्रभाव एवं मानसित जुन सीमासम्म प्रभावित भए, त्यसले दोस्रो पटक उनीहरूलाई दण्डवत् (सजदा) गर्न बाध्य गरिदियो ।

(११०) भनिदिनुस् कि अल्लाहलाई अल्लाह भनेर पुकार अथवा रहमान (अति कृपालु) भनेर । जुन नामले पनि पुकार, सबै राम्रा नाम उसैका हुन् ।[1] न त तिमी आफ्नो नमाज़ बडो उच्च स्वरले पढ तथा न बिल्कुलै लुकाएर, बरु त्यसको मध्यको मार्ग खोज ।[2]

قُلِ ادْعُوا اللَّهَ أَوِ ادْعُوا الرَّحْمَٰنَ ۖ أَيًّا مَّا تَدْعُوا فَلَهُ الْأَسْمَاءُ الْحُسْنَىٰ ۚ وَلَا تَجْهَرْ بِصَلَاتِكَ وَلَا تُخَافِتْ بِهَا وَابْتَغِ بَيْنَ ذَٰلِكَ سَبِيلًا ﴿١١٠﴾

[1]जसरी पूर्वमा गुज्रिसकेको छ कि मक्काका मूर्तिपूजकहरूका लागि अल्लाहका गुणवाचक नाम 'रहमान (दयालु), अथवा 'रहीम (कृपालु) अपरिचित थिए तथा केही कथनहरूमा चर्चित छ कि केही मूर्तिपूजकहरूले नबी सल्लल्लाहु अलैहि वसल्लमको पवित्र मुखबाट 'या रहमान व रहीम' (हे दयालु तथा कृपालु) का शब्द सुने पश्चात भने कि हामीलाई त यो भन्दछ कि मात्र एउटा अल्लाहलाई पुकार तथा स्वयं दुई देवताहरूलाई पुकारिराखेको छ । त्यसपछि यो आयत अवतरित भयो । (इब्ने कसीर)

[2]यसको अवतरणको विषयमा आदरणीय इब्ने अब्बास वर्णन गर्दछन् कि मक्कामा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम लुकेर रहनु हुन्थ्यो, जब आफ्ना साथीहरूलाई नमाज़ पढाउनु हुन्थ्यो त आवाज अलि ठूलो पार्नु हुन्थ्यो । मूर्तिपूजक कुरआन सुनेर कुरआनलाई तथा अल्लाहलाई अपशब्द भन्दथे, अल्लाह तआला को आदेश भयो : आफ्नो आवाजलाई यति उच्च नगर कि मूर्तिपूजक सुनेर कुरआनलाई अपशब्द भनून् तथा आफ्नो आवाज न यति मसिनो गर कि सहाबा पनि सुन्न नसकून् । (सहीह बुख़ारी किताबुत तौहीद बाब क़ौल अल्लाह तआला अन्ज़लहु बिइल्मेही वल मलायेकतु यशहदून तथा सहीह मुस्लिम किताबुस सलातु बाबुत तवस्सुत फ़िल क़िराअत) स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लमको घटना हो कि रात्रि नबी सल्लल्लाहु अलैहि वसल्लम आदरणीय अबू बक्र सिद्दीक़ (رضی اللہ عنہ) तिरबाट जानुहुँदा देख्नुभयो कि उनी मसिनो आवाजले नमाज़ पढिराखेका छन् । अनि आदरणीय उमर फ़ारूक (رضی اللہ عنہ) लाई पनि देख्ने अवसर हुँदाखेरी उनी ठूलो स्वरले नमाज़ पढिराख्नु भएको थियो । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले दुबैसित सोधे पश्चात आदरणीय अबू बकले उत्तर दिनुभयो कि म जसको महिमा वर्णन गर्नुमा लीन थिएँ, त्यो मेरो आवाज सुनिराखेको थियो, आदरणीय उमरले उत्तर दिनुभयो कि मेरो उद्देश्य निदाइराखेकालाई ब्यूँझाउनु तथा शैतानलाई धपाउनु थियो । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय अबू बक सिद्दीक (رضی اللہ عنہ) सित भन्नभयो कि आफ्नो आवाज अलि ठूलो गर तथा आदरणीय उमर (رضی اللہ عنہ) सित भन्नुभयो आफ्नो आवाज केही कम गर । (मिश्क़ात बाब सलातुल लैल, ससंदर्भ अबू दाऊद, तिर्मिज़ी) आदरणीया आयशा (رضی اللہ عنہ) भन्नुहुन्छ कि यो आयत दुआ (प्रार्थना) को विषयमा अवतरित भयो । (बुख़ारी तथा मुस्लिम ससंदर्भ फ़तहुल क़दीर)

وَقُلِ الْحَمْدُ لِلَّهِ الَّذِي لَمْ يَتَّخِذْ وَلَدًا وَلَمْ يَكُن لَّهُ شَرِيكٌ فِي الْمُلْكِ وَلَمْ يَكُن لَّهُ وَلِيٌّ مِّنَ الذُّلِّ وَكَبِّرْهُ تَكْبِيرًا ﴿١١١﴾

(१११) तथा यो भनिदिनुस् कि सबै प्रशंसाहरू अल्लाहकै लागि हुन्, जसले न त आफ्नो कुनै पुत्र बनायो तथा न राज्यमा त्यसको कोही सहभागी छ, न त्यो यस्तो तुच्छ छ कि त्यसको कोही सहायक होस् तथा तिमी त्यसको पूर्ण महिमाको वर्णन गर्दैरह ।

سُورَةُ الْكَهْفِ

## सूरतुल कहफ्-१८

सूरः कहफ्* मक्कामा उत्रेको तथा यसमा एक सय दस आयत एवं बाह्र रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाह अति कृपालु तथा अत्यन्त दयालुको नामबाट प्रारम्भ गर्दछु ।

الْحَمْدُ لِلَّهِ الَّذِي أَنزَلَ عَلَىٰ عَبْدِهِ الْكِتَابَ وَلَمْ يَجْعَل لَّهُ عِوَجًا ﴿١﴾

(१) सबै प्रशंसाहरू त्यही अल्लाहका लागि नै योग्य छन्, जसले आफ्नो भक्तमाथि यो कुरआन अवतरित गऱ्यो तथा त्यसमा कुनै कमी शेष छाडेन ।[1]

*कहफ्को अर्थ हो गुफा । यसमा गुफावालाहरूको वर्णन छ, अतः यसलाई सूरःकहफ् भनिन्छ । यसका प्रारम्भिक दस आयत तथा अन्तिम दस आयतको महत्वको वर्णन हदीसमा छ, जसले यसलाई याद गर्छ तथा पढ्दछ, त्यो दज्जालको उपद्रवबाट सुरक्षित रहनेछ । (सहीह मुस्लिम फ़ज़्ल सूरःअल-कहफ्), जसले यसको पाठ शुक्रवारको दिन गर्नेछ, अर्को शुक्रवारसम्म त्यसको लागि एउटा विशेष प्रकारको ज्योतिको प्रकाश रहने छ (मुस्तद्रक हाकिम २/३६८ तथा अल्बानीले यसलाई सहीह जामे सग़ीर संख्या ६४७० मा सहीह भन्नुभएको छ) । यसको पाठबाट घरमा शान्ति तथा उन्नति हुन्छ । एकपटक एउटा सहाबीले सूरः कहफ् पढ्नुभयो । घरमा एउटा पशु पनि थियो, त्यो चम्केर उफ्रन थाल्यो, उनले ध्यानपूर्वक हेरे कि के कुरो छ ? त्यसपछि उनलाई एउटा बादल देखियो जसले उनलाई छोपिराखेका थियो, सहाबीले यस घटनाको वर्णन नबी सल्लल्लाहु अलैहि वसल्लमसित गर्नुभयो उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो यसलाई पढ्दै गर । कुरआन पाठ गर्दाखेरि शान्ति अवतरित हुन्छ । (सहीह बुख़ारी संख्या ४७२४, मुस्लिम संख्या ७९५)

[1]अथवा कुनै कमी तथा सन्तुलित मार्गबाट विचलन यसमा राखिएको छैन, बरु यसलाई सोझो मार्ग राखिएको छ अथवा (قيم) को अर्थ भक्तहरूको धार्मिक सांसारिक हितको ध्यान तथा रक्षा गर्ने किताब ।

قَيِّمًا لِّيُنذِرَ بَأْسًا شَدِيدًا مِّن لَّدُنْهُ وَيُبَشِّرَ الْمُؤْمِنِينَ الَّذِينَ يَعْمَلُونَ الصَّالِحَاتِ أَنَّ لَهُمْ أَجْرًا حَسَنًا ﴿٢﴾

(२) बरु सबैकुरा ठीक-ठीक राख्यो ताकि आफ्नो पास[1] को कडा यातनाबाट सतर्क गरिदेओस् तथा ईमान भएका एवं पुण्य कार्य गर्नेवालाहरूलाई शुभ-सूचना सुनाइदेओस् कि उनका लागि उत्तम प्रतिफल छन्।

مَّاكِثِينَ فِيهِ أَبَدًا ﴿٣﴾

(३) जसमा उनीहरू स्थायीरूपले सधैं निवास गर्नेछन्।

وَيُنذِرَ الَّذِينَ قَالُوا اتَّخَذَ اللَّهُ وَلَدًا ﴿٤﴾

(४) तथा उनीहरूलाई पनि सचेत गरिदेओस् जो भन्दछन् कि अल्लाह (तआला) सन्तान भएको छ।[2]

مَّا لَهُم بِهِ مِنْ عِلْمٍ وَلَا لِآبَائِهِمْ ۚ كَبُرَتْ كَلِمَةً تَخْرُجُ مِنْ أَفْوَاهِهِمْ ۚ إِن يَقُولُونَ إِلَّا كَذِبًا ﴿٥﴾

(५) वास्तवमा न त स्वयं उनीहरूलाई यसको ज्ञान छ न उनका पूर्वजहरूलाई। यो आक्षेप[3] साह्रै नराम्रो हो जुन उनको मुखबाट निस्किराखेका छ, उनी मात्र असत्य बोलिराखेका छन्।

فَلَعَلَّكَ بَاخِعٌ نَّفْسَكَ عَلَىٰ آثَارِهِمْ إِن لَّمْ يُؤْمِنُوا بِهَٰذَا الْحَدِيثِ أَسَفًا ﴿٦﴾

(६) अनि यदि यिनीहरूले यस कुरामाथि ईमान कायम गर्दैनन् भने के तपाईं उनका पछाडी यसै दुःखमा आफ्नो प्राण नै त्याग्नु हुनेछ ?

إِنَّا جَعَلْنَا مَا عَلَى الْأَرْضِ زِينَةً

(७) धर्तीमा जे-जति[4] छ हामीले त्यसलाई धर्तीको शोभाको निम्ति बनाएका छौं ताकि हामीले उनीहरूको

[1](من لَّدُنه) जुन त्यस अल्लाहको तर्फबाट अवतरित हुनेछ।

[2]जस्तै यहूदी, इसाई तथा केही मूर्तिपूजकहरू (फ़रिश्ता अल्लाहका पुत्रीहरू हुन्) मा विश्वास छ।

[3]यस वाक्यबाट तात्पर्य यही हो कि अल्लाहको सन्तान छ, जुन पूर्णरूपमा असत्य छ।

[4](هذا الحديث) (यस कुरा) बाट तात्पर्य क़ुरआन करीम हो। काफ़िरहरूबाट ईमान क़ायम गर्ने कुराको जति तीव्र इच्छा उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई थियो तथा उनीहरूबाट मुख फर्काउँदा तथा अस्वीकारबाट उहाँ सल्लल्लाहु अलैहि वसल्लमाई जुन अत्याधिक दुख हुन्थ्यो, यसमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको यसै अवस्था तथा भावको वर्णन छ।

[5]धर्तीमा जे-जति छ, पशु जीव, जड, वनस्पति, खनिज एवं अन्य गडिएका कोष, यो सबै सांसारिक शोभा तथा त्यसका सुन्दरता हुन्।

لَهَا لِنَبْلُوَهُمْ أَيُّهُمْ أَحْسَنُ عَمَلًا ⑦

परीक्षा गरौं कि उनीहरूमध्ये पुण्यको कार्य गर्ने को हो ।

وَإِنَّا لَجَاعِلُونَ مَا عَلَيْهَا صَعِيدًا جُرُزًا ⑧

(८) तथा यसमाथि जे-जति छ, हामीले त्यसलाई एउटा समतल मैदान पारिदिनछौं।[1]

أَمْ حَسِبْتَ أَنَّ أَصْحَابَ الْكَهْفِ وَالرَّقِيمِ كَانُوا مِنْ آيَاتِنَا عَجَبًا ⑨

(९) के तिमी आफ्नो विचारमा गुफा तथा शिलालेखवालाहरूलाई हाम्रा निशानीहरूमध्ये कुनै अति विचित्र निशानी ठानिराखेका छौ ?[2]

إِذْ أَوَى الْفِتْيَةُ إِلَى الْكَهْفِ فَقَالُوا رَبَّنَا آتِنَا مِنْ لَدُنْكَ رَحْمَةً وَهَيِّئْ لَنَا مِنْ أَمْرِنَا رَشَدًا ⑩

(१०) ती नवयुवकहरूले जब गुफामा शरण लिए त प्रार्थना गरे कि हे हाम्रो प्रभु ! हामीलाई आफ्नो पासबाट कृपा प्रदान गर तथा हाम्रा कार्यमा हाम्रो लागि मार्गलाई सरल वनाइदेउ ।[3]

---

[1](صعيدا) सफा मैदान तथा (جرزا) विल्कुलै समतल, जसमा कुनै वृक्ष इत्यादि नहोस् । अर्थात् एक समय आउनेछ कि यो संसार यी सबै शोभासहित नष्ट हुनेछ तथा धर्ती एउटा समतल मैदान समान हुनेछ, यस पश्चात हामी पाप तथा पुण्यका कर्महरूको आधारमा निर्णय दिनेछौं ।

[2]अर्थात् यो एकमात्र ठूलो विचित्र निशानी (लक्षण) होइन, वरु हाम्रो प्रत्येक निशानी विचित्र छ। यो आकाश र धर्तीको सृष्टि तथा त्यसको प्रवन्ध, सूर्य तथा चन्द्रमा एवं तारामण्डलको नियन्त्रण, रात्रि-दिनको आउने-जाने क्रम तथा अन्य धेरै निशानीहरू, के कम विचित्र छन् । (كهف) (कहफ़) त्यस गुफालाई भन्दछन्, जुन पर्वतमा हुन्छ। (رقيم) (रक़ीम) केही विद्वानहरूको निकट त्यस वस्तीलाई भन्छन् जहाँबाट यी नवयुवकहरू गएका थिए, केही भन्दछन् त्यस पर्वतको नाम हो जसमा यो गुफा स्थित छ। केही भन्दछन् (رقيم) को प्रयोग (مرقوم)को अर्थमा गरिएको छ तथा यो एउटा पाटी (तख्ती) हो फलामको अथवा शिशाको, जसमा कहफ़मा सुनिराखेका व्यक्तिहरूका नाम लेखिएका छन् । यसलाई (رقيم) यसैले भनिएको छ कि यसमा नाम लेखिएको छ। आधुनिक रिसर्चवाट ज्ञात भयो कि प्रथम कुरो अधिक उचित छ। जुन पर्वतमा यो गुफा स्थित छ त्यसको निकट नै एउटा वस्ती छ जसलाई अब (الرقيب) (अल-रक़ीब) भनिन्छ जुन युगको परिवर्तनका कारण (الرقيم) (अल-रक़ीम) को परिवर्तित रूप हो।

[3]यी तिनै नवयुवक हुन् जसलाई कहफ़वाला भनिएको छ (विस्तृत वर्णन अगाडी आउने छ) उनीहरूले जब आफ्नो धर्मको सुरक्षाका लागि गुफामा शरण लिए त यो प्रार्थना गरे। कहफ़वालाहरूको यस कथामा नवयुवकहरूका लागि ठूलो शिक्षा छ, आजकलका नवयुवकहरूको अधिकतर समय व्यर्थमा नष्ट हुन्छ तथा

فَضَرَبْنَا عَلَىٰٓ ءَاذَانِهِمْ فِى ٱلْكَهْفِ سِنِينَ عَدَدًا ﴿١١﴾

(११) अनि हामीले उनका कानहरूमा, गणनाका कैयन् वर्षसम्म त्यसै गुफामा पर्दा हालिदियौं ।[1]

ثُمَّ بَعَثْنَٰهُمْ لِنَعْلَمَ أَىُّ ٱلْحِزْبَيْنِ أَحْصَىٰ لِمَا لَبِثُوٓا۟ أَمَدًا ﴿١٢﴾

(१२) अनि पछि हामीले उनीहरूलाई उभ्यायौं ताकि हामीले यो थाहा पाउन सकौं कि दुबै गुटहरूमध्ये यस दीर्घकाललाई जुन उनीहरूले व्यतीत गरे, कसले अधिक याद राखेको छ ?[2]

نَّحْنُ نَقُصُّ عَلَيْكَ نَبَأَهُم بِٱلْحَقِّ ۚ إِنَّهُمْ فِتْيَةٌ ءَامَنُوا۟ بِرَبِّهِمْ

(१३) हामी उनका सत्य कथा तिम्रो समक्ष वर्णन गरिराखेका छौं । यी केही नवयुवक[3] आफ्नो प्रभुमाथि

अल्लाहतिर अलिकति पनि ध्यान हुँदैन । काश ! आजको मुसलमान नवयुवक आफ्नो यौवनको समयमा क्षमा माँगेर पैग़म्बरहरूको अनुकरण गर्दथ्यो तथा आफ्नो पूर्ण शक्ति एवं सामर्थ्यलाई अल्लाहको इबादतमा लगाउँथ्यो ।

[1]अर्थात् कानहरूमा पर्दा हालेर उनका कानहरूलाई थुनिदियो ताकि बाहिरको आवाजबाट उनको निद्रामा व्यवधान नपरोस् । अर्थ यो हो कि हामीले उनीहरूलाई गहिरो निंद्रामा सुताइदियौं ।

[2]ती दुई गुटहरूको अर्थ विरोध गर्ने मानिसहरू हुन् । यिनीहरू या त त्यसै समयका मानिस थिए, जसका बीच उनको विषयमा मतभेद भयो, अथवा रिसालतका समयका काफ़िर तथा ईमानवालाहरू तात्पर्य हुन् तथा केही विद्वानहरू भन्छन् कि यी कहफ़वाला नै हुन्, उनका दुई गुट बनिहालेका थिए । एउटाले भन्थ्यो कि हामी यति समयसम्म सुतिराख्यौ । दोस्रो उसलाई नकारदथ्यो तथा प्रथम गुटभन्दा कम वा अधिक समय बताउँथ्यो ।

[3]अब सारांश पश्चात विस्तृत वर्णन गरिँदैछ । यी नवयुवकहरू केही विद्वानहरू भन्छन्, ईसाई धर्मका अनुयायी थिए तथा केही भन्दछन् कि उनको समय आदरणीय ईसाभन्दा पूर्वको हो । हाफ़िज़ इब्ने कसीरले यसै कथनलाई प्राथमिकता दिएका छन् । भन्दछन् कि एउटा राजा थियो, दक़ियानूस, जसले मानिसहरूलाई मूर्तिपूजा गर्न तथा उनका नाममा भोग-प्रसाद चढाउनुको शिक्षा दिन्थ्यो । अल्लाह तआलाले यी केही नवयुवकहरूको हृदयमा यो कुरा हालिदिए कि इबादतको योग्य त एक मात्र अल्लाह नै हो, जो आकाश तथा धर्तीको स्रष्टा हो तथा अखिल जगत्को प्रभु हो । (فِتْيَةٌ) अल्पवाचक बहुवचन हो, जसबाट ज्ञात हुन्छ कि यिनको संख्या नौ अथवा त्योभन्दा पनि कम थियो । यिनी अलग्ग भएर एक स्थानमा अल्लाह एक्लोको इबादत गर्थे । विस्तारै-विस्तारै मानिसहरूमा उनको एकेश्वरवादको विश्वासको चर्चा हुनलाग्यो, त राजासम्म कुरा पुग्यो तथा उसले तिनीहरूलाई आफ्नो दरबारमा बोलाएर सोध्यो त त्यहाँ उनीहरूले निर्भीक भई अल्लाहको एकेश्वरवादको वर्णन गरे । अन्त्यमा राजा तथा आफ्ना समुदायका मूर्तिपूजकहरूको भयले सुरक्षाका निम्ति आबादीभन्दा टाढा एउटा पर्वतको

وَزِدْنٰهُمْ هُدًى ﴿١٣﴾

ईमान कायम गरेका थिए तथा हामीले उनको मार्ग-दर्शनमा उन्नति प्रदान गरेका थियौं ।

وَّرَبَطْنَا عَلٰى قُلُوْبِهِمْ اِذْ قَامُوْا فَقَالُوْا رَبُّنَا رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ لَنْ نَّدْعُوَا۠ مِنْ دُوْنِهٖٓ اِلٰهًا لَّقَدْ قُلْنَآ اِذًا شَطَطًا ﴿١٤﴾

(१४) तथा हामीले उनीहरूका हृदय सुदृढ गरिदिएका थियौं,[1] जबकि उनीहरू जुरुक्क उठे[2] तथा भन्नलागे कि हाम्रो प्रभु त त्यही हो, जो आकाशहरू तथा धर्तीको पालनकर्ता हो, असम्भव छ कि हामी त्यसका अतिरिक्त कुनै अन्य देवतालाई पुकारौं । यदि यस्तो गर्‍यौं भने, हामीले अत्याधिक अनुचित[3] कुरा भन्यौं ।

هٰٓؤُلَآءِ قَوْمُنَا اتَّخَذُوْا مِنْ دُوْنِهٖٓ اٰلِهَةً ۭ لَوْلَا يَاْتُوْنَ عَلَيْهِمْ بِسُلْطٰنٍۭ بَيِّنٍ ۭ فَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا ﴿١٥﴾

(१५) यो हो हाम्रो समुदाय जसले त्यसका अतिरिक्त अन्य देवता बनाएका छन् । उनीहरूको प्रभुत्वको कुनै स्पष्ट प्रमाण किन प्रस्तुत गर्दैनन् ? अल्लाहमाथि झूठो आरोप लगाउने भन्दा अत्याचारी को होला ?

وَاِذِ اعْتَزَلْتُمُوْهُمْ وَمَا يَعْبُدُوْنَ اِلَّا

(१६) तथा जबकि तिमी उनीहरूबाट तथा अल्लाहका अतिरिक्त उनका अन्य देवताहरूबाट अलग्ग

गुफामा लुकिहाले, जहाँ अल्लाह तआलाले उनीहरूलाई गहिरो निंद्रामा सुताइदियो तथा उनी तीन सय नौं वर्षसम्म त्यहाँ सुतिरहे ।

[1]अर्थात हिज्रतका कारण आफ्ना प्रिय तथा सम्बन्धिहरूको वियोग तथा सुख-सुविधापूर्ण जीवनबाट वञ्चित भई जुन दुख उनीहरूले सहनुपर्‍यो, त्यसमा हामीले उनका हृदयलाई दृढ गरिदियौं ताकि उनीहरू यी दुखहरूलाई सहन गर्न सकून् । यसको अतिरिक्त सत्य वचनको कर्तव्य साहसका साथ निर्वाह गर्न सकून् ।

[2]यस (قيام) (उभिनु) बाट तात्पर्य व्याख्याकारहरूको निकट, त्यो आव्हान हो, जुन उनको राजाको सदनमा भयो तथा राजाका समक्ष उभेर उनीहरूले एकेश्वरवादमाथि यो भाषण दिए, केही अन्य भन्दछन् कि नगर बाहिर आपसमा नै उभेर एक-अर्कालाई एकेश्वरवादको यो कुरा बताए जुन व्यक्तिगत रूपले अल्लाहको तर्फबाट उनको हृदयमा पारियो तथा यसप्रकार एकेश्वरवादी आपसमा एकत्रित भए ।

[3](شططا) को अर्थ झूटो अथवा सीमा उल्लघंन गर्नु हो ।

اللّٰهَ فَأْوٗا اِلَى الْكَهْفِ يَنْشُرْ لَكُمْ رَبُّكُمْ مِّنْ رَّحْمَتِهٖ وَيُهَيِّئْ لَكُمْ مِّنْ اَمْرِكُمْ مِّرْفَقًا ﴿١٦﴾

भईहालेका छौ, त अब कुनै गुफामा[1] गई बस, तिम्रो प्रभुले तिमीमाथि आफ्नो दया गर्नेछ तथा तिम्रो कार्यमा सुविधा उपलब्ध गर्नेछ ।

وَتَرَى الشَّمْسَ اِذَا طَلَعَتْ تَّزٰوَرُ عَنْ كَهْفِهِمْ ذَاتَ الْيَمِيْنِ وَاِذَا غَرَبَتْ تَّقْرِضُهُمْ ذَاتَ الشِّمَالِ وَهُمْ فِيْ فَجْوَةٍ مِّنْهُ ۭ ذٰلِكَ مِنْ اٰيٰتِ اللّٰهِ ۭ مَنْ يَّهْدِ اللّٰهُ فَهُوَ الْمُهْتَدِ ۚ وَمَنْ يُّضْلِلْ فَلَنْ تَجِدَ لَهٗ وَلِيًّا مُّرْشِدًا ﴿١٧﴾

(१७) तथा तपाईं देख्नुहुनेछ कि सूर्य उदय हुनेसमय उनीहरूका गुफाको दायाँतिर ढल्कन्छ तथा सूर्यास्तको समय उनका बायाँतिर फर्कन्छ तथा उनीहरू त्यस गुफाको विस्तृत स्थानमा छन् ।[2] यो अल्लाहका निशानीहरूमध्ये हो ।[3] अल्लाह (तआला) जसको मार्ग-दर्शन गर्छ, त्यो सत्यमार्गमा छ तथा जसलाई त्यसले विचलित गर्दछ, असम्भव छ कि तपाईं त्यसको कोही कार्यक्षम तथा मार्गदर्शक पाउन सक्नुहोस् ।[4]

[1]अर्थात् जब तिमी आफ्ना समुदायका देवताहरूबाट अलग्ग भयौ त अब शारीरिक रूपले पनि उनीहरूबाट अलग्ग होउ । यो कहफ़वालाहरूले आपसमा भने अत: यस पश्चात उनीहरू एक गुफामा गई लुके, जब उनी बेपत्ता भएको समाचार फैलियो त खोजी गरियो तर उनीहरू त्यसैप्रकार असफल रहे जुनप्रकार नवी सल्लल्लाहु अलैहि वसल्लमको खोजीमा मक्काका काफ़िर सौर गुफासम्म पुगिसके उपरान्त पनि, जसमा उहाँ सल्लल्लाहु अलैहि वसल्लम आदरणीय अबू बक्र (رضي الله عنه) का साथ उपस्थित हुनुहुन्थ्यो, असफल रहेका थिए ।

[2]अर्थात् सूर्योदयको समय दायाँदिशातिर तथा अस्ताउने समय बायाँ दिशातिर फर्केर निस्कन्थ्यो तथा यसप्रकार दुबै समयमा उनीहरूमाथि घाम पर्दैनथ्यो यद्यपि उनी गुफामा विस्तृत स्थानमा विश्राम गरिराखेका थिए । (فجوة) को अर्थ हो विस्तृत स्थान ।

[3]अर्थात् सूर्य यसप्रकार निस्कनु कि खुल्ला स्थान हुनु उपरान्त त्यहाँ धूप पर्दैन, अल्लाहका निशानीहरूमध्ये हो ।

[4]जस्तै दकि़यानूस कट्टरवादी राजा तथा त्यसका अनुयायी मार्ग–दर्शनबाट बञ्चित रहे त कसैले उनलाई मार्ग-दर्शन दिन सकेन ।

وَتَحْسَبُهُمْ أَيْقَاظًا وَهُمْ رُقُودٌ وَنُقَلِّبُهُمْ ذَاتَ الْيَمِينِ وَذَاتَ الشِّمَالِ وَكَلْبُهُم بَاسِطٌ ذِرَاعَيْهِ بِالْوَصِيدِ لَوِ اطَّلَعْتَ عَلَيْهِمْ لَوَلَّيْتَ مِنْهُمْ فِرَارًا وَلَمُلِئْتَ مِنْهُمْ رُعْبًا ﴿١٨﴾

(१८) तथा तपाईं ठान्नुहुन्छ कि उनी ब्यूँझिएको अवस्थामा छन्, हाँलाकि निदाएको अवस्थामा थिए,[1] स्वयं हामीले उनीहरूलाई दायाँ-बायाँ कोल्टो फर्काउने पार्दथ्यौं।[2] उनको कुकुर पनि दैलोमा आफ्नो हात फैलाएको थियो। यदि तपाईं च्याएर हेर्न चाहनुहुन्थ्यो भने अवश्य पछाडी फर्कि भाग्नुहुन्थ्यो तथा उनको भय तथा त्रास तपाईंमा समाविष्ट हुन्थ्यो।[3]

وَكَذَٰلِكَ بَعَثْنَاهُمْ لِيَتَسَاءَلُوا بَيْنَهُمْ قَالَ قَائِلٌ مِّنْهُمْ كَمْ لَبِثْتُمْ قَالُوا لَبِثْنَا يَوْمًا أَوْ بَعْضَ يَوْمٍ قَالُوا رَبُّكُمْ أَعْلَمُ بِمَا لَبِثْتُمْ فَابْعَثُوا أَحَدَكُم بِوَرِقِكُمْ هَٰذِهِ إِلَى الْمَدِينَةِ

(१९) तथा त्यसैप्रकार हामीले उनीहरूलाई ब्यूँझाएर उठायौं[4] ताकि आपसमा सोधपूछ गरून्। उनीहरूमध्ये एउटा बोल्नेले सोध्यो कि तिमी कति बेरसम्म बस्यौ ? उनीहरूले उत्तर दिए एक दिन अथवा एक दिनभन्दा पनि कम।[5] भन्नलागे कि तिमी बसिरहेको पूरा ज्ञान अल्लाह

[1](أيقاظ) बहुवचन हो (يقظ) को तथा (رقود) बहुवचन हो (راقد) को, उनीहरू ब्यूँझिराखेका यसकारण प्रतीत हुन्थे कि उनका आँखा खुला थिए, जुनप्रकारले ब्यूँझिराखेका व्यक्तिको हुन्छ, केही विद्वान भन्छन् कि धेरै कोल्टो फेर्नुका कारण उनी ब्यूँझिएको अवस्थामा देखिन्थे।

[2]ताकि उनको शरीरलाई माटोले नखाओस्।

[3]यो उनको सुरक्षाको निम्ति अल्लाहको तर्फबाट प्रबन्ध थियो ताकि कोही उनको निकट जान नसकोस्।

[4]अर्थात् जुनप्रकार हामीले उनलाई आफ्नो शक्तिले निद्रामा पारिराखेका थियौं, त्यसैप्रकार तीन सय नौं वर्ष पश्चात उनलाई हामीले उठायौं तथा यसप्रकार उठायौं कि उनका शरीर त्यसैप्रकार सुरक्षित थिए, जुनप्रकार तीन सय नौं वर्ष पूर्व सुत्दाखेरि थिए। यसैकारण आपसमा एक-अर्कासित प्रश्न गरे।

[5]अर्थात् जुनबेला उनी गुफामा गए, प्रात: कालको प्रथम चरण थियो तथा जुनबखत ब्यूँझिए त्यस समय दिनको अन्तिम समय थियो, यस आधारमा उनीहरूले ठाने कि शायद एक दिन अथवा त्यसभन्दा पनि कम दिनको केही भागमा निदाएका थिए।

(तआला) लाई नै छ ।[1] अब आफू मध्ये कसैलाई यो चाँदीको सिक्का दिएर नगर पठाउ, त्यसले ठीक प्रकारले देखोस् कि नगरको कुनचाहिं भोजन शुद्ध छ ।[2] अनि त्यसैबाट तिम्रो भोजनको लागि ल्याओस् तथा त्यसले अति सतर्कता एवं कोमल व्यवहार गरोस् तथा कसैलाई तिम्रो बारेमा सूचना नदेओस् ।[3]

فَلْيَنظُرْ أَيُّهَا أَزْكَىٰ طَعَامًا فَلْيَأْتِكُم بِرِزْقٍ مِّنْهُ وَلْيَتَلَطَّفْ وَلَا يُشْعِرَنَّ بِكُمْ أَحَدًا ﴿١٩﴾

(२०) यदि यी (काफ़िर) तिमीमाथि अधिकार पाउँछन् भने तिमीलाई ढुङ्गा हानि मार्छन अथवा पुन: तिमीलाई आफ्नो धर्ममा फर्काउनेछन्, त फेरि तिमी कदापि सफलता पाउन सक्ने छैनौ ।[4]

إِنَّهُمْ إِن يَظْهَرُوا عَلَيْكُمْ يَرْجُمُوكُمْ أَوْ يُعِيدُوكُمْ فِي مِلَّتِهِمْ وَلَن تُفْلِحُوا إِذًا أَبَدًا ﴿٢٠﴾

(२१) तथा यसप्रकार हामीले मानिसहरूलाई उनको अवस्थाबाट अवगत गराइदियौं[5] ताकि उनीहरू जानीहालून्

وَكَذَٰلِكَ أَعْثَرْنَا عَلَيْهِمْ لِيَعْلَمُوا أَنَّ

[1]तर अधिक सुत्नका कारण उनीहरू बडो असमंजस्यमा थिए । अन्तमा विषय अल्लाहलाई समर्पित गरियो किनकि त्यो सही अवधि जान्दछ ।

[2]ब्यूँझे पश्चात भोजन जुन मनुष्यको सबभन्दा महत्वपूर्ण आवश्यकता हो, त्यसको व्यवस्था गर्ने चिन्ता भयो ।

[3]सावधानी तथा विनम्रतामाथि बल यस सम्भावनाको कारण दिइयो जसले गर्दा उनीहरू नगरबाट निस्की निर्जन स्थानमा आएका थिए । उसलाई सावधानी गर्न भनियो कि कहीं त्यसको व्यवहारबाट नगरवासीहरूलाई हाम्रो बारे थाहा नहोस् तथा हामीमाथि कुनै नयाँ आपत्ति घटित नहोस् जस्तो कि अघिल्लो आयतमा छ ।

[4]अर्थात् आख़िरतको जुन सफलताको लागि हामीले यो दुख तथा संकट सहन गर्‍यौं, स्पष्ट कुरो छ कि यदि नगरवासीहरूले हामीलाई बाध्य गरी फेरि पूर्वजहरूको धर्मतिर फर्काइदिए भने हाम्रो मूल उद्देश्य नै समाप्त हुनेछ । हाम्रो मेहनत पनि व्यर्थ जानेछ तथा हामी न धर्मको हुनेछौं न संसारको ।

[5]अर्थात् जुनप्रकार हामीले उनीहरूलाई सुतायौं तथा ब्यूँझायौं, त्यसैप्रकार हामीले मानिसहरूलाई उनको बारेमा परिचित गरिदियौं । यो परिचय यसप्रकार भयो कि जुन समय कहफका मानिसहरूको एउटा साथी चाँदीको त्यो सिक्का लिएर नगरमा गयो, जुन तीन सय नौ वर्षको राजा दक़ियानूसको कालको थियो

وَعۡدَ ٱللَّهِ حَقّٞ وَأَنَّ ٱلسَّاعَةَ لَا رَيۡبَ فِيهَآ إِذۡ يَتَنَٰزَعُونَ بَيۡنَهُمۡ أَمۡرَهُمۡۖ فَقَالُواْ ٱبۡنُواْ عَلَيۡهِم بُنۡيَٰنٗاۖ رَّبُّهُمۡ أَعۡلَمُ بِهِمۡۚ قَالَ ٱلَّذِينَ غَلَبُواْ عَلَىٰٓ أَمۡرِهِمۡ لَنَتَّخِذَنَّ عَلَيۡهِم مَّسۡجِدٗا ٢١

कि अल्लाहको वचन पूर्णतः सत्य छ तथा क़ेयामतमा कुनै सन्देह तथा शंका छैन,[1] जबकि उनी आफ्नो कुरामा आपसमा मतभेद गरिराखेका थिए ।[2] भन्नलागे यिनीका गुफ़ामाथि एउटा भवन निर्माण गरिहाल ।[3] उनको प्रभु नै उनको दशाको अधिक ज्ञानी छ ।[4] जसले उनको विषयमा प्रभाव प्राप्त गरे, उनीहरू भन्नलागे

---

तथा त्यो सिक्का एउटा पसलेलाई दियो त त्यो आश्चर्य चकित भयो, उसले नजीकको पसलेलाई देखायो, त्यो पनि देखेर चकित भयो, जबकि कहफ़वालाहरूको साथी भन्दैरहयो कि म यसै नगरको वासी हूँ तथा हिजै यहाँबाट गएको हूँ, तर यस हिजोको तीन शताब्दीहरू व्यतीत भइसकेका थिए, मानिसहरू कसरी उसको कुरोलाई मान्दथे ? मानिसहरूलाई यो सन्देह भयो कि कहीं यस व्यक्तिलाई गाडिएको धन त प्राप्त भएको छैन । बिस्तारै-बिस्तारै यो कुरो राजा तथा त्यसको अधिकारीसम्म पुग्यो तथा त्यस साथीको सहायताले त्यो गुफासम्म पुग्यो तथा कहफ़वालाहरूलाई भेट्यो । त्यस पश्चात अल्लाह तआ़लाले उनीहरूलाई फेरि मृत्यु दियो । (इब्ने क़सीर)

[1]अर्थात् कहफ़वालाहरूको यस घटनाबाट विदित हुन्छ कि क़ेयामत घटित हुने तथा मृत्यु पश्चात उभ्याइने अल्लाहको वचन सत्य छ । अस्वीकार गर्नेहरूका लागि घटनामा अल्लाहको शक्तिको एउटा नमूना विद्यमान छ ।

[2](إِذۡ) या त समय सूचक हो (أعثرنا) को अर्थात् हामीले उनीहरूलाई त्यसबखत तिनका अवस्थासित परिचित गरायौं, जब उनी मृत्यु पश्चात उभ्याइने अथवा क़यामत घटित हुने विषयमा आपसमा झगडा गरिराखेका थिए अथवा यहाँ (اذكُر) लुप्त छ अर्थात् त्यो समय याद गर जब उनी आपसमा झगडा गरिराखेका थिए ।

[3]यी भन्ने को थिए ? केही विद्वान भन्छन् कि त्यस समयका निष्ठहरू थिए, केही अन्य भन्दछन् कि राजा तथा त्यसका साथी थिए, जब आएर भेट गरे तथा त्यसको पश्चात अल्लाहले उनीहरूलाई फेरि निद्रमा पारिदियो, तथा राजा तथा त्यसका साथीहरूले भने कि उनीहरूको सुरक्षाको लागि एउटा भवन बनाइयोस् ।

[4]झगडा गर्नेहरूलाई अल्लाह तआ़लाले भन्नुभयो कि उनको विषयमा सत्य ज्ञान अल्लाहलाई नै छ ।

कि हामी त उनका (छिमेकमा) मस्जिद बनाइहाल्नेछौं ।[1]

سَيَقُولُونَ ثَلَٰثَةٌ رَّابِعُهُمْ كَلْبُهُمْ وَيَقُولُونَ خَمْسَةٌ سَادِسُهُمْ كَلْبُهُمْ رَجْمًۢا بِٱلْغَيْبِ وَيَقُولُونَ سَبْعَةٌ وَثَامِنُهُمْ كَلْبُهُمْ قُل رَّبِّىٓ أَعْلَمُ بِعِدَّتِهِم مَّا يَعْلَمُهُمْ

(२२) केही मानिसहरू भन्नेछन् कि गुफाका मानिस तीन थिए तथा चौथो उनको कुकुर थियो । केहीले भन्नेछन् कि पाँच थिए, छैठौं उनको कुकुर थियो,[2] परोक्षको विषयमा (निशाना नहेरिकन) अनुमानले ढुङ्गा हान्नु हो,[3] केहीले भन्नेछन् कि उनी सात छन् तथा आठौं उनको कुकुर[4] हो । तपाईं भनिदिनुस्

[1]यी प्रभाव प्राप्त गर्नेहरू ईमान भएका थिए अथवा काफिर तथा मूर्तिपूजक ? शौकानीले प्रथम विचारलाई मान्यता दिएका छन् तथा इब्ने कसीरले दोस्रो विचारलाई किनभने पुण्यकारी मानिसहरूका चिहानमाथि मस्जिदहरूको निर्माण अल्लाहलाई प्रिय छैन । नवी सल्लल्लाहु अलैहि वसल्लमले भन्नभयो:

«لَعَنَ اللهُ الْيَهُودَ وَالنَّصَارَىٰ اتَّخَذُوا قُبُورَ أَنْبِيَاءِهِمْ وَصَالِحِيهِمْ مَسَاجِدَ»

"अल्लाह तआलाले यहूदी तथा इसाईहरूमाथि धिक्कार गरोस् जसले आफ्ना पैगम्वर तथा महात्माहरूका कवरहरूलाई मस्जिद वनाए ।" (सहीह वुखारी कितावुल जनायेज वाव मायकरह मिन इत्तेखाजिल मस्जिदे अलल क़वूरे तथा सहीह मुस्लिम कितावुल मसाजिद वत्तेखाजि स्सोवरे फीहा)

आदरणीय उमर (رضى الله عنه) को खिलाफत (शासनकाल) मा इराकमा आदरणीय दानियालको कब्र ज्ञात भयो त उहाँले आदेश दिनुभयो कि यसलाई लुकाएर सामान्य कव्रहरू जस्तै वनाइयोस् ताकि मानिसहरूको ज्ञानमा नआओस् कि अमुक पैगम्वरको हो । (तफ़सीर इब्ने क़सीर)

[2]यी भन्ने तथा उनको विभिन्न संख्या वताउनेहरू रिसालतका युगका ईमानवाला तथा काफ़िर थिए । विशेषरूपले अहले किताब जो आकाशीय पुस्तकहरूबाट सूचित भएको तथा ज्ञानको दावी गर्दथे ।

[3]अर्थात् ज्ञान उनीहरूमध्ये कसैसित छैन, जसरी नहेरिकन कसले पत्थर हानोस्, यी पनि त्यसैप्रकार आँकलन गरिराखेका छन् ।

[4]अल्लाह तआलाले मात्र तीन कथनहरूको वर्णन गरेको छ, प्रथम दुई कथनहरूलाई (رجما بالغيب) (आँकलन) भनेर तिनको खण्डन गरिदियो तथा यस तेस्रो कथनको वर्णन पछि गऱ्यो जसबाट केही व्याख्याकारहरुले यो भावार्थ निकालेका छन् कि

إِلَّا قَلِيلٌ ۚ فَلَا تُمَارِ فِيهِمْ إِلَّا مِرَاءً ظَاهِرًا وَلَا تَسْتَفْتِ فِيهِم مِّنْهُمْ أَحَدًا ﴿٢٢﴾

कि मेरो प्रभु उनको संख्या राम्ररी जान्दछ, उनीहरूलाई निकै कम मानिसहरू जान्दछन्।[1] तसर्थ तपाई पनि उनीहरूका विषयमा मात्र संक्षिप्त वार्ता नै गर्नुस्।[2] तथा उनीहरूमध्ये कसैसित उनको विषयमा सोधपूछ पनि नगर्नुस्।[3]

وَلَا تَقُولَنَّ لِشَايْءٍ إِنِّي فَاعِلٌ ذَٰلِكَ غَدًا ﴿٢٣﴾

(२३) तथा कहिल्यै कुनै कार्यमा यो नभन्नु कि म यसलाई भोलि गर्नेछु।

إِلَّا أَن يَشَاءَ اللَّهُ ۚ وَاذْكُر رَّبَّكَ

(२४) परन्तु साथै इंशा अल्लाह (अल्लाहले चाहयो भने) भनिहाल्नु[4] तथा जहिलेपनि बिर्सदाखेरि

यो शैली यस कथनको सही हुने कुराको प्रमाण हो तथा वास्तवमा उनको यति नै संख्या थियो। (इब्ने क़सीर)

[1]केही सहाबाहरूसित सम्बन्धित कथन छ कि उनीहरू भन्दथे कि म पनि ती कम मानिसहरूमध्ये हुँ, जो यो जान्दछन् कि कहफ़वालाहरूको संख्या कति थियो ? उनी केवल सात थिए जस्तो कि तेस्रो कथनमा भनिएको छ। (इब्ने क़सीर)

[2]अर्थात् केवल यिनै कुराहरूमाथि रोकिनुस् जसको सूचना तपाईंलाई प्रकाशना (वह्यी) द्वारा दिइएको छ। अथवा संख्याको निर्धारणमा वाद-विवाद नगर्नुस्, मात्र यो भनिदिनुस् कि यस निर्धारणको कुनै प्रमाण छैन।

[3]अर्थात विवादकारीहरूसित उनको विषयमा केही नसोध्नुस्, यसकारण कि जोसित सोधियोस् उसलाई सोध्नेभन्दा अधिक ज्ञान हुनुपर्दछ, जबकि यहाँ परिस्थिति यसको विपरीत छ तपाईं सल्लल्लाहु अलैहि वसल्लमको पासमा त तैपनि विश्वस्त ज्ञानको एउटा माध्यम प्रकाशना (वह्यी) मौजुद छ जबकि अरुहरूसित आँकलन तथा अनुमानका अतिरिक्त केही पनि छैन।

[4]व्याख्याकारहरू भन्छन् कि यहूदीहरूले नबी सल्लल्लाहु अलैहि वसल्लमसित तीनवटा कुराहरू सोधेका थिए, आत्माको वास्तविकता के हो तथा कहफ़वाला एवं तथा जुलकरनैन को थिए ? भन्दछन् कि यिनै प्रश्न यस सूरःको अवतरणका कारण बने। नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो म तिमीलाई भोलि उत्तर दिनेछु, तर त्यस पश्चात पन्द्र दिनसम्म जिब्रील प्रकाशना (वह्यी) लिएर आएनन्। अनि जब आए त अल्लाह तआलाले (إنشاء الله) (इंशा अल्लाह) भन्नुको आदेश दियो। आयतमा (غدا) (भोलि) सित तात्पर्य आगामी दिवस हो अर्थात् जहिले पनि निकट भविष्य अथवा ढिलो गरी कुनै कार्य गर्नु विचार गर्दा (إنشاء الله) अवश्य भन्न गर,

إِذَا نَسِيتَ وَقُلْ عَسَىٰٓ أَن يَهْدِيَنِ رَبِّى لِأَقْرَبَ مِنْ هَٰذَا رَشَدًا ﴿٢٤﴾

आफ्नो प्रभुलाई स्मरण गर्नु[1] तथा भनिराख्नु कि मलाई पूर्ण आशा छ कि मेरो प्रभुले यसभन्दा पनि अधिक मार्ग-दर्शनको निकटको कुराको मार्गदर्शन गर्नेछ ।[2]

وَلَبِثُوا۟ فِى كَهْفِهِمْ ثَلَٰثَ مِا۟ئَةٍ سِنِينَ وَٱزْدَادُوا۟ تِسْعًا ﴿٢٥﴾

(२५) तथा उनीहरू आफ्नो गुफामा तीन सय वर्षसम्म रहे तथा नौं वर्ष थप व्यतीत गरे ।[3]

قُلِ ٱللَّهُ أَعْلَمُ بِمَا لَبِثُوا۟ ۖ لَهُۥ غَيْبُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ ۖ أَبْصِرْ بِهِۦ وَأَسْمِعْ ۚ مَا لَهُم مِّن دُونِهِۦ مِن وَلِىٍّ وَلَا يُشْرِكُ

(२६) तपाईं भनिदिनुस् कि अल्लाह नै उनीहरू बसिरहने समयलाई राम्ररी जान्दछ । आकाशहरू तथा धर्तीको अर्न्तज्ञान मात्र उसैलाई छ, त्यो कस्तो राम्रो द्रष्टा तथा श्रोता छ । अल्लाहको अतिरिक्त उनलाई

किनभने मनुष्यलाई त थाहा छैन कि त्यो जुन विचारलाई व्यक्त गरिराखेको छ, त्यसलाई पूर्ण गर्नुको सौभाग्य पनि उसै अल्लाहतिरबाट प्राप्त हुनु छ अथवा छैन ?

[1]अर्थात् यदि कुराकानी तथा वाचा गर्दाखेरि (إنشاء الله) भन्न बिर्सन्छौ भने जतिखेर स्मरण हुन्छ (إنشاء الله) (इंशा अल्लाह) भनिहाल अथवा फेरि प्रभुलाई याद गर्नुको अर्थ त्यसको महिमा तथा प्रशंसा एवं त्यसबाट क्षमादानको प्रार्थना हो ।

[2]अर्थात् म जुन कुराको संकल्प गरिराखेको छु, सम्भव छ अल्लाह तआला त्यसभन्दा श्रेष्ठ तथा लाभकारी कार्यतिर मेरो मार्ग-दर्शन गरोस् ।

[3]अधिकतर व्याख्याकारहरूले यसलाई अल्लाहको कथन भनेका छन् । सूर्यको गणनाबाट तीन सय तथा चन्द्रमाको गणनाबाट तीन सय नौं वर्ष हुन्छन् । केही ज्ञानीहरूको विचार छ कि यो ती मानिसहरूको कथन हो, जो उनका विभिन्न संख्या भन्दथे, जसको प्रमाण अल्लाहको यो कथन हो,"अल्लाहलाई नै उनको बसिरहने कुराको उचित ज्ञान छ ।" जसको अर्थबाट उनीहरू वर्णित अवधिलाई नकारात्मक रूपले लिन्छन् परन्तु अधिकतरको व्याख्याका अनुसार यसको भावार्थ यो हो कि अहले किताब अथवा कोही अन्य यस बताइएको अवधिसित मतभेद गर्छन् भने तपाईं उनीसित भनिदिनुस् कि तिमी धेरै जान्दछौ अथवा अल्लाह । जब उसले तीन सय नौं वर्षको अवधि भनेको छ भने यही ठीक छ किनभने त्यही जान्दछ कि उनीहरू कति अवधिसम्म गुफामा रहे ।

[4]यो अल्लाहको ज्ञान तथा सूचना गुणको अधिक स्पष्टीकरण हो ।

فِي حُكْمِهِۦٓ أَحَدًا ۝٢٦

कोही सहायता गर्नेछैन, र अल्लाह तआला आफ्नो आदेशमा कसैलाई सम्मिलित गर्दैन ।

وَٱتْلُ مَآ أُوحِيَ إِلَيْكَ مِن كِتَابِ رَبِّكَ ۖ لَا مُبَدِّلَ لِكَلِمَٰتِهِۦ وَلَن تَجِدَ مِن دُونِهِۦ مُلْتَحَدًا ۝٢٧

(२७) तथा तिमीतिर जुन तिम्रो प्रभुको किताब प्रकाशना (वह्‌यी) गरिएको छ, त्यसलाई पढ्दै गर ।[1] त्यसका कुराहरूलाई कोही बदल्ने छैन, तिमी त्यसको अतिरिक्त कदापि कुनै शरण पाउने छैनौ ।[2]

وَٱصْبِرْ نَفْسَكَ مَعَ ٱلَّذِينَ يَدْعُونَ رَبَّهُم بِٱلْغَدَوٰةِ وَٱلْعَشِيِّ يُرِيدُونَ وَجْهَهُۥ ۖ وَلَا تَعْدُ عَيْنَاكَ عَنْهُمْ تُرِيدُ زِينَةَ ٱلْحَيَوٰةِ

(२८) तथा आफूलाई उनैको संगतमा राख्ने गर, जो आफ्नो प्रभुलाई बिहान तथा साँझ पुकार्दछन् तथा उसैको मुख (अनुग्रह) को चाहना गर्दछन् । सावधान ! तिम्रा आँखा उनीबाट हट्न नपाऊन्[3] कि सांसारिक जीवनको वैभवको प्रयत्नमा

---

[1]त्यसो त यो सामान्य आदेश हो कि जुनसुकै कुराको पनि प्रकाशना (वह्‌यी) तपाईं सल्लल्लाहु अलैहि वसल्लमतिर गरिन्छ, त्यसको पाठ गर्नुस् तथा मानिसहरूलाई यसको शिक्षा दिनुस् । तर कहफ्वालाहरूको कथाको अन्त्यमा यस आदेशको तात्पर्य यो पनि हुनसक्छ कि कहफ्वालाहरूको विषयमा मानिसहरू जे चाहन्छन् भन्दै गरून्, तर अल्लाह तआलाले त्यसको विषयमा आफ्नो पुस्तकमा जे-जति मात्रामा वर्णन गरिदिएको छ, त्यही ठीक छ, त्यही मानिसहरूलाई पढेर सुनाइदिनुस्, यसको अतिरिक्त अन्य कुराहरूमा ध्यान नदिनुहोस् । .

[2]अर्थात् यदि यसलाई वर्णन गर्नुमा आनाकानी तथा विमुखता गर्नुभयो, यसका वाक्यहरूमा परिवर्तनको प्रयत्न गर्नुभयो भने अल्लाहबाट तपाईंलाई बचाउने कोही हुनेछैन । सम्बोधन यद्यपि नबी सल्लल्लाहु अलैहि वसल्लमलाई छ, तर मूल सम्बोधन मुसलमानहरूलाई छ ।

[3]यो त्यही आदेश हो, जुन यसभन्दा पूर्व सूरः अन्आमको आयत ५२ मा गुज्रिसकेको छ । यसबाट तात्पर्य ती सहावा किराम हुन्, जो निर्धन तथा कमजोर थिए, जोसँग बस्न कुरैशका धनवानहरूलाई स्वीकार थिएन । आदरणीय साअद बिन अबी वक्कास भन्नुहुन्छ कि हामी ६ जना नबी सल्लल्लाहु अलैहि वसल्लमका साथ थियौं, म बाहेक उनीहरू बिलाल, इब्ने मसऊद, एक हुजली तथा दुई अन्य सहाबा थिए । मक्काका कुरैशले इच्छा प्रकट गरे कि उनीहरूलाई आफ्नो पासबाट हटाइदिनुस् ताकि हामी तपाईं सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भएर तपाईं सल्लल्लाहु अलैहि वसल्लमका कुरा सुनौं । नबी सल्लल्लाहु अलैहि

लागिहाल ।[1] (हेर) त्यसको भनाई नमान्नु जसको हृदयलाई हामीले आफ्नो स्मरणबाट विचलित गरिदिएका छौं, तथा जो आफ्नो मनोकामनाको पछि लागेको छ । तथा जसको कर्म असीम भइसकेको छ ।[2]

الدُّنْيَا ۚ وَلَا تُطِعْ مَنْ أَغْفَلْنَا قَلْبَهُ عَن ذِكْرِنَا وَاتَّبَعَ هَوَاهُ وَكَانَ أَمْرُهُ فُرُطًا ﴿٢٨﴾

(२९) तथा घोषणा गरिदेउ कि यो परमसत्य (कुर्आन) तिम्रो प्रभुतिरबाट छ । अब जो चाहन्छ, ईमान ल्याओस् तथा जो चाहन्छ कुफ्र गरोस् । अत्याचारीहरूका लागि हामीले त्यो आगो तयार गरेका छौं जसको परिधिले उनीहरूलाई घेरिहाल्नेछ । यदि उनीहरू आर्तनाद (फिराद) गर्नेछन् भने उनको सहायता त्यस पानीले गरिनेछ जुन तातो तेलछट जस्तो हुनेछ जसले अनुहार पोलिदिन्छ, साह्रै नराम्रो पानी हो, तथा बडो नराम्रो विश्रामस्थल (नरक) हो ।

وَقُلِ الْحَقُّ مِن رَّبِّكُمْ ۖ فَمَن شَاءَ فَلْيُؤْمِن وَمَن شَاءَ فَلْيَكْفُرْ ۚ إِنَّا أَعْتَدْنَا لِلظَّالِمِينَ نَارًا أَحَاطَ بِهِمْ سُرَادِقُهَا ۚ وَإِن يَسْتَغِيثُوا يُغَاثُوا بِمَاءٍ كَالْمُهْلِ يَشْوِي الْوُجُوهَ ۚ بِئْسَ الشَّرَابُ وَسَاءَتْ مُرْتَفَقًا ﴿٢٩﴾

(३०) निःसन्देह जसले ईमान स्थापित गरे तथा पुण्यका कार्य गरे, हामीले कुनै पुण्यकर्ताको प्रतिफल ध्वस्त गर्दैनौं ।[3]

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ إِنَّا لَا نُضِيعُ أَجْرَ مَنْ أَحْسَنَ عَمَلًا ﴿٣٠﴾

वसल्लमको हृदयमा आयो कि शायद मेरो कुरा सुन्नाले उनका हृदयमा परिवर्तन होस् । तर अल्लाह तआलाले कठोरताले यस्तो गर्नबाट रोकिदियो । (सहीह मुस्लिम फज फज़ायलुस सहाबा बाब फज़ायलुस सआद बिन अबी वक्कास)

[1]अर्थात् यिनीहरूलाई टाढा पारेर तपाईं सल्लल्लाहु अलैहि वसल्लम समाजमा सम्मानित व्यक्ति एवं धनवानहरूलाई आफ्नो निकट गर्न चाहनु हुन्छ ?

[2](فرطا) यदि (إفراط) बाट छ भने अर्थ हुनेछ सीमा पारी तथा यदि (تفريط) सित छ भने अर्थ हुनेछ कि यिनीहरूको कार्यको फल हानि तथा विनाश हो ।

[3]कुर्आनको वर्णन शैलीका अनुसार नरकवासीहरूको वर्णन पश्चात स्वर्गमा जानेहरूको वर्णन छ ताकि मानिसहरूमा स्वर्ग प्राप्त गर्नुको इच्छा तथा उत्सुकता उत्पन्न होस् ।

أُولَٰئِكَ لَهُمْ جَنَّاتُ عَدْنٍ تَجْرِي مِن تَحْتِهِمُ الْأَنْهَارُ يُحَلَّوْنَ فِيهَا مِنْ أَسَاوِرَ مِن ذَهَبٍ وَيَلْبَسُونَ ثِيَابًا خُضْرًا مِّن سُندُسٍ وَإِسْتَبْرَقٍ مُّتَّكِئِينَ فِيهَا عَلَى الْأَرَائِكِ ۚ نِعْمَ الثَّوَابُ وَحَسُنَتْ مُرْتَفَقًا ﴿٣١﴾

(३१) उनीहरूका लागि स्थाई बगैंचाहरू छन्, तिनीहरू मुनि नदीहरू बग्नेछन्, त्यहाँ तिनीहरू स्वर्णका कंगन पहिराइनेछन् ।[1] तथा हरियो रङ्गका कोमल एवं मसिना तथा मोटा रेशमका वस्त्र पहिराइनेछन् ।[2] त्यहाँ सिंहासनमा तकिया लगाइनेछन् । कति राम्रो प्रतिफल छ तथा कति उत्तम विश्रामग्रह छ ।

وَاضْرِبْ لَهُم مَّثَلًا رَّجُلَيْنِ جَعَلْنَا لِأَحَدِهِمَا جَنَّتَيْنِ مِنْ أَعْنَابٍ وَحَفَفْنَاهُمَا بِنَخْلٍ وَجَعَلْنَا بَيْنَهُمَا زَرْعًا ﴿٣٢﴾

(३२) तथा उनीहरूलाई ती दुई व्यक्तिहरूको उदाहरण पनि सुनाइदिनुस्[3] जसमध्ये एउटालाई हामीले दुईटा अंगुरका बगैंचा दिएका थियौं र जसलाई खजुरका वृक्षहरूबाट हामीले घेरेका थियौं ।[4] तथा दुबैको बीच खेती पैदा गरेका थियौं ।[5]

[1]कुर्आनको अवतरणको समयमा तथा त्यसभन्दा पूर्व परम्परा थियो कि राजा, धनवान तथा कबीलाका मुखियाहरू आफ्ना हातहरूमा स्वर्णका बाला लगाउँथे जसबाट उनको प्रतिष्ठा प्रदर्शित हुन्थ्यो । स्वर्गमा जानेहरूलाई पनि यो बाला (कङ्गन) पहिराइनेछन् ।

[2](سُندس) मसिनो रेशम (إستبرق) मोटो रेशम । संसारमा पुरुषहरूका लागि स्वर्ण तथा रेशमी वस्त्र निषेध छन्, जो यस आदेशानुसार कर्म गर्नेछन्, संसारमा यी निषेधित वस्तुहरूको प्रयोगबाट बच्नेछन्, उनीहरूलाई स्वर्गमा यी सारा कुराहरू प्राप्त हुनेछन्, त्यहाँ कुनै वस्तु निषेध हुनेछैन बरु स्वर्गमा जानेहरू जुन वस्तुको इच्छा गर्नेछन्, त्यो उपस्थित हुनेछ ।

[3]व्याख्याकारहरूको यसमा मतभेद छ कि ती दुई व्यक्ति को थिए ? अल्लाह तआलाले बुझाउनको निम्ति उदाहरण स्वरुप तिनको वर्णन गरेको छ अथवा वास्तवमा दुई व्यक्ति यस्ता थिए ? यदि थिए भने इस्राईलका वंशमा गुज्रेका छन् अथवा मक्कावासी थिए, यिनीमध्ये एउटा ईमान भएको (निष्ठ) तथा दोस्रो काफ़िर (अनिष्ठ) थियो ।

[4]जसरी चारैतिर पर्खालबाट सुरक्षा गरिन्छ, त्यसरी नै यी बगैंचाहरूका चारैतिर खजूरका वृक्ष थिए, जुन बार तथा चारैतिर पर्खालका काम दिन्थे ।

[5]अर्थात् दुबै बगैंचाहरूका बीच खेती हुन्थ्यो जसबाट अनाजहरूका फसल प्राप्त हुन्थे । यसप्रकार दुबै बगैंचा अन्न तथा फलहरूका संयोग थिए ।

كِلْتَا الْجَنَّتَيْنِ اٰتَتْ اُكُلَهَا وَلَمْ تَظْلِمْ مِّنْهُ شَيْـًٔا ۙ وَّفَجَّرْنَا خِلٰلَهُمَا نَهَرًا ۙ﴿٣٣﴾

(३३) दुबै बगैंचाले आफ्ना फल अत्याधिक दिए र त्यसमा कुनै कमी गरेनन् ।[1] तथा हामीले ती बगैंचाहरूका मध्य नहर प्रवाहित गरेका थियौं ।[2]

وَّكَانَ لَهٗ ثَمَرٌ ۚ فَقَالَ لِصَاحِبِهٖ وَهُوَ يُحَاوِرُهٗٓ اَنَا اَكْثَرُ مِنْكَ مَالًا وَّاَعَزُّ نَفَرًا ﴿٣٤﴾

(३४) तथा (यसप्रकार) त्योसँग फल थिए, एकदिन उसले कुरै-कुरामा आफ्नो साथीसित[3] भन्यो कि म तिमीभन्दा अधिक धनवान छु तथा जत्था[4] मा पनि अधिक सम्मान भएको छु ।

وَدَخَلَ جَنَّتَهٗ وَهُوَ ظَالِمٌ لِّنَفْسِهٖ ۚ قَالَ مَآ اَظُنُّ اَنْ تَبِيْدَ هٰذِهٖٓ اَبَدًا ۙ﴿٣٥﴾

(३५) तथा त्यो आफ्नो बगैंचामा गयो र आफ्नो प्राणमाथि अत्याचार गर्ने व्यक्ति थियो, भन्नथाल्यो कि म यो सोच्न सक्दिन कि कुनै समयमा पनि यो नष्ट हुनसक्छ ।

وَّمَآ اَظُنُّ السَّاعَةَ قَاۤىِٕمَةً ۙ وَّلَىِٕنْ رُّدِدْتُّ اِلٰى رَبِّيْ لَاَجِدَنَّ خَيْرًا مِّنْهَا مُنْقَلَبًا ﴿٣٦﴾

(३६) तथा न म क़ेयामतको स्थापनालाई मान्दछु तथा यदि मानि पनि हालुँ कि म आफ्नो प्रभुतिर फर्काइए पनि निःसन्देह म (त्यस फर्किने ठाउँलाई) यसभन्दा पनि अधिक उत्तम पाउनेछु ।[5]

[1]अर्थात् आफ्नो पैदावारमा कुनै कमी गर्दैनथे, बरु प्रशस्त पैदावार दिन्थे ।

[2]ताकि बगैंचाहरूको सिंचाइ गर्नुमा कुनै बाधा नहोस् अथवा वर्षाहुने क्षेत्रहरूको जस्तै वर्षामा आश्रित नरहून् ।

[3]अर्थात् बगैंचाहरूको मालिकले जो काफ़िर थियो, आफ्नो साथीसित भन्यो जुन ईमान भएको थियो ।

[4](نفر) (जत्था) सित तात्पर्य सन्तान तथा नोकर एवं कर्मचारी हुन् ।

[5]अर्थात् त्यो काफ़िर अभिमान एवं गर्वमा मात्र लिप्त भएन बरु त्यसको उन्मत्तता एवं भविष्यको सुन्दर एवं लामो आशाले त्यसलाई अल्लाहको पकड तथा प्रतिकार बाट बिल्कुल अचेत गरिदियो । यसको अतिरिक्त उसले क़ेयामतलाई नै नकारिदियो । अनि दूराग्रहको प्रदर्शन गर्दै भन्यो कि यदि क़ेयामत भयो भने त्यहाँ पनि शुभ परिणाम मेरो भाग्य हुनेछ । जसको अनिष्ठता तथा दुष्टता सीमारहित हुनपुग्छ, तिनीहरू अभिमानको नशामा मस्त भई यस्तै अहङ्कारको दाबी गर्दछन् ।

قَالَ لَهُ صَاحِبُهُ وَهُوَ يُحَاوِرُهُ أَكَفَرْتَ بِالَّذِي خَلَقَكَ مِن تُرَابٍ ثُمَّ مِن نُّطْفَةٍ ثُمَّ سَوَّاكَ رَجُلًا ﴿٣٧﴾

(३७) उसको साथीले उसित कुरा गर्दै भन्यो कि के तिमी त्यस (पूज्य) लाई मान्दैनौ जसले तिमीलाई माटोले पैदा गर्‍यो । अनि वीर्यबाट पुनः तिमीलाई पूर्ण इंसान (पुरूष) बनायो ।[1]

जस्तो अन्य स्थानमा अल्लाह तआलाको आदेश छ :

﴿وَلَئِن رُّجِعْتُ إِلَىٰ رَبِّي إِنَّ لِي عِندَهُ لَلْحُسْنَىٰ﴾

"यदि मलाई प्रभुतिर फर्काइयो भने त्यहाँ पनि मेरा लागि पुण्यका कुरा नै छन् ।" (सूरः हा.मीम.सजदः-५०)

﴿أَفَرَأَيْتَ الَّذِي كَفَرَ بِآيَاتِنَا وَقَالَ لَأُوتَيَنَّ مَالًا وَوَلَدًا﴾

"के तपाईंले त्यस व्यक्तिलाई देख्नुभयो जसले हाम्रा आयतहरूलाई नकार्‍यो तथा दावी गर्‍यो कि आखिरतमा पनि मलाई माल तथा सन्तानले सम्मानित गरिनेछ ।" (सूरः मरियम-७७)

[1]त्यसका यी कुराहरू सुनेर त्यसका ईमान भएको साथीले त्यसलाई शिक्षा एवं उपदेशको रूपमा सम्झायो कि आफ्नो रचयितासँग कुफ्र गरिराखेका छौ, जसले तिमीलाई माटो तथा पानी (वीर्य) बाट उत्पन्न गर्‍यो । मनुष्यहरूका पूर्वज आदरणीय आदम माटोले बनाइएको हुनाले मनुष्यहरूको मूल माटो नै भयो । अनि निकटवर्ती कारण त्यो वीर्य बन्यो जुन पिताको पिठयूँबाट निस्की माताको गर्भाशयमा गयो, त्यहाँ नौं महिना रहयो, नौ महिना त्यसको सेवा गर्‍यो । त्यसपछि त्यसलाई पूर्ण मानव बनाएर माताको गर्भाशयबाट निकाल्यो । केही विद्वानहरूका निकट माटोबाट पैदा हुनुको अर्थ हो कि मनुष्य जुन भोजन खान्छ, त्यो सबै धर्तीबाट अर्थात् माटोबाट नै प्राप्त हुन्छ, यसै भोजनबाट त्यो वीर्य बन्दछ, जुन स्त्रीको गर्भाशयमा गई मनुष्यको जन्मको माध्यम बन्दछ । यसप्रकार पनि प्रत्येक मनुष्यको मूल माटो नै हो । कृतघ्न मनुष्यलाई त्यसको मूल सम्झाएर त्यसलाई त्यसको स्रष्टातिर आकर्षित गरिदैछ कि तिमी आफ्नो यथार्थतामाथि विचार गर, तथा त्यस पश्चात प्रभुको उपकारलाई हेर कि तिमीलाई उसले के बनाइदियो तथा त्यसको रचनामा कोही त्यसको अंशियार तथा सहायक छैन, यो सबै कुरा गर्ने केवल त्यो अल्लाह तआला नै हो जसलाई मान्न तिमी तयार छैनौ । आह, यो मनुष्य कति कृतघ्न छ ।

لَّٰكِنَّا۠ هُوَ ٱللَّهُ رَبِّي وَلَآ أُشۡرِكُ بِرَبِّيٓ أَحَدٗا ﴿٣٨﴾

(३८) तर म (त आस्था राख्दछु कि) त्यही अल्लाह मेरो प्रभु हो, म आफ्नो प्रभुसँग कसैलाई पनि अंशियार बनाउने छैन ।[1]

وَلَوۡلَآ إِذۡ دَخَلۡتَ جَنَّتَكَ قُلۡتَ مَا شَآءَ ٱللَّهُ لَا قُوَّةَ إِلَّا بِٱللَّهِۚ إِن تَرَنِ أَنَا۠ أَقَلَّ مِنكَ مَالٗا وَوَلَدٗا ﴿٣٩﴾

(३९) तथा तिमीले आफ्नो बगैंचामा जाँदाखेरि किन भनेनौं कि अल्लाहले चाहेको कुरा हुनेछ, कुनै शक्ति छैन किन्तु अल्लाहको सहायताले,[2] यदि तिमी मलाई धन तथा सन्तानमा आफूभन्दा कम देखिराखेका छौ ।

فَعَسَىٰ رَبِّيٓ أَن يُؤۡتِيَنِ خَيۡرٗا مِّن جَنَّتِكَ وَيُرۡسِلَ عَلَيۡهَا حُسۡبَانٗا مِّنَ ٱلسَّمَآءِ فَتُصۡبِحَ صَعِيدٗا زَلَقًا ﴿٤٠﴾

(४०) अति सम्भव छ कि मेरो प्रभुले मलाई तिम्रो यस बगैंचाभन्दा पनि उत्तम प्रदान गरोस्[3] तथा यसमाथि आकाशीय आपत्ति पठाइदेओस् त यो चिप्लने बलौटे फाँट बनेर जाओस् ।[4]

---

[1]अर्थात् म तिम्रो जस्तो कुरा गर्ने छैन, वरु म त अल्लाहको प्रभुत्व तथा त्यसको एकतालाई स्वीकार गर्दछु । यसबाट पनि ज्ञात हुन्छ कि दोस्रो साथी मिश्रणवादी थियो ।

[2]अल्लाहका उपकारहरूको कृतज्ञता व्यक्त गर्नुको विधि भन्दै भन्नुभयो कि बगैंचामा प्रवेश गर्दाखेरि गर्व तथा घमण्डको प्रदर्शन गर्नुको सट्टा यो भनेको भए (ماشاء الله لا قوة إلاّ بالله) अर्थात् जे-जति हुन्छ, अल्लाहको इच्छाले हुन्छ, त्यसले चाहेको खण्डमा त्यसलाई शेष राख्न सक्छ तथा चाहेको खण्डमा नाश गर्नसक्छ । यसैकारण हदीसमा वर्णित छ कि जसलाई कसैको धन, सन्तान अथवा दशा राम्रो लाग्छ भने उसले (ماشاء الله لا قوة إلاّ بالله) पढ्नु पर्छ । (तफ़सीर इब्ने कसीर ससंदर्भ मुसनद अबु यअ्ला)

[3]संसारमा अथवा आख़िरतमा अथवा दुवै स्थानहरूमा ।

[4](حسبان، غفران) को समरूप हिसाबसित छ । अर्थात् यस्तो प्रकोप जुन कसैका कर्महरूका कारण आउँछ । अर्थात् आकाशीय प्रकोपद्वारा त्यसले हिसाब लेओस् । तथा यो स्थान जहाँ यस समय हराभरा बगैंचा छ, चिप्लो मैदान बनिहालोस् ।

أَوْ يُصْبِحَ مَآؤُهَا غَوْرًا فَلَن تَسْتَطِيعَ لَهُۥ طَلَبًا ﴿٤١﴾

(४१) अथवा यसको पानी तल झरेर जाओस् तथा तिम्रो वशमा नरहोस् कि तिमी त्यसलाई खोजेर ल्याउन सक ।[1]

وَأُحِيطَ بِثَمَرِهِۦ فَأَصْبَحَ يُقَلِّبُ كَفَّيْهِ عَلَىٰ مَآ أَنفَقَ فِيهَا وَهِىَ خَاوِيَةٌ عَلَىٰ عُرُوشِهَا وَيَقُولُ يَٰلَيْتَنِى لَمْ أُشْرِكْ بِرَبِّىٓ أَحَدًا ﴿٤٢﴾

(४२) तथा यसका (सारा) फल घेरिहालिए[2] अनि त्यो आफ्नो यस खर्चमा जुन उसले त्यसमाथि गरेको थियो, आफ्ना हात माड्न थाल्यो[3] तथा त्यो बगैंचा जराहरूसहित ध्वस्त भएको थियो ।[4] तथा (त्यो व्यक्ति) भनिराखेको थियो कि अफसोच ! मैले आफ्नो प्रभुसँग कसैलाई पनि अंशियार न बनाएको भए ![5]

وَلَمْ تَكُن لَّهُۥ فِئَةٌ يَنصُرُونَهُۥ مِن دُونِ ٱللَّهِ وَمَا كَانَ مُنتَصِرًا ﴿٤٣﴾

(४३) त्यसको पक्षमा कुनै पनि जत्था उठेन कि अल्लाहबाट कोही त्यसको रक्षा गर्न सक्थ्यो तथा न त्यो स्वयं नै बदला लिने बन्नसक्यो ।

[1]अथवा मध्यमा जुन नदी छ, जुन बगैंचाको हरियाली तथा उपजको कारण छ, यसको पानीलाई यति गहिराईमा पुऱ्याइदेओस् कि यसबाट पानी निकाल्नु नै असम्भव हुन पुगोस् । तथा जहाँ पानी अधिक गहिराईमा पुगेको हुन्छ त त्यहाँ ठूला-ठूला अश्व शक्ति मोटर तथा मेशीनहरू पनि पानी तान्न असफल रहन्छन् ।

[2]यो संकेत हो सत्यनाश ध्वस्त हुनुबाट अर्थात् त्यसको सम्पूर्ण बगैंचा विनष्ट गरियो ।

[3]अर्थात् बगैंचाको निर्माण तथा सुधार एवं खेतीको खर्चमाथि चिन्तित भयो, जुन त्यसको पश्चातापको संकेत हो ।

[4]अर्थात् जुन छत तथा छप्परहरूमाथि अंगुरका लहरहरू थिए, ती सबै धर्तीमा झरे तथा अंगूरहरूको सम्पूर्ण फसल नष्ट भए ।

[5]अब उसलाई आभास भयो कि अल्लाहसँग कसैलाई अंशियार ठहराउनु, त्यसका उपकारबाट लाभान्वित भई त्यसको आदेशको अवहेलना गर्नु तथा उसको समक्ष गर्व तथा घमण्ड गर्नु कुनै पनि प्रकारले मनुष्यलाई शोभा दिंदैन, तर अब लज्जा एवं खेदको कुनै लाभ थिएन ।

[6]जुन जत्थामाथि त्यसलाई गर्व थियो, त्यो पनि त्यसको काम आएन, न त्यो स्वयं नै अल्लाहको यातनाबाट बच्न कुनै प्रबन्ध गर्नसक्यो ।

هُنَالِكَ الْوَلَايَةُ لِلّٰهِ الْحَقِّ ۗ هُوَ خَيْرٌ ثَوَابًا وَّخَيْرٌ عُقْبًا ﴿٤٤﴾

(४४) यहींबाट (सिद्ध छ) कि अधिकार[1] उसै अल्लाह (तआ़ला) सत्यको लागि छ, त्यो प्रतिफल प्रदान गर्न तथा परिणामका अनुसार अति उत्तम छ ।[2]

وَاضْرِبْ لَهُمْ مَّثَلَ الْحَيٰوةِ الدُّنْيَا كَمَآءٍ اَنْزَلْنٰهُ مِنَ السَّمَآءِ فَاخْتَلَطَ بِهٖ نَبَاتُ الْاَرْضِ فَاَصْبَحَ هَشِيْمًا تَذْرُوْهُ الرِّيٰحُ ۗ وَكَانَ اللّٰهُ عَلٰى كُلِّ شَيْءٍ مُّقْتَدِرًا ﴿٤٥﴾

(४५) तथा उनका समक्ष सांसारिक जीवनको उदाहरण पनि वर्णन गर, जस्तै पानी, जसलाई हामी आकाशबाट अवतरित गर्दछौं, त्यसबाट धर्तीको उब्जनी आपसमा मिलिजुली (निस्किएको) हुन्छ, अनि अन्तमा त्यो सुक्दछ जसलाई बतासहरूले लिएर उडिरहन्छन् । तथा अल्लाह (तआ़ला) प्रत्येक कुरोमाथि सामर्थ्य राख्दछ ।[3]

[1](ولاية) को अर्थ हो संरक्षण अधिकार तथा सहायता, अर्थात् त्यस स्थानमा प्रत्येक ईमानवाला तथा काफ़िरलाई ज्ञात हुन्छ कि अल्लाह बाहेक कोही सहायक छैन तथा त्यसको यातनाबाट बचाउने सामर्थ्य राख्दैन, यही कारण हो कि फेरि यस अवसरमा ठूला-ठूला दुष्ट तथा शक्तिशाली पनि ईमानको प्रदर्शनमा बाध्य हुन्छन् यद्यपि त्यस समयको ईमान लाभकारी तथा अंगीकार हुँदैन । जसरी कुर्आनमा फिरऔंनको विषयमा लेखिएको छ कि त्यो डुब्दाखेरि भन्नथाल्यो ।

﴿ءَامَنتُ أَنَّهُ لَآ إِلَٰهَ إِلَّا ٱلَّذِىٓ ءَامَنَتْ بِهِۦ بَنُوٓاْ إِسْرَٰٓءِيلَ وَأَنَا۠ مِنَ ٱلْمُسْلِمِينَ﴾

"म त्यस अल्लाहमाथि ईमान क़ायम गरे जसमाथि इस्राईलका पुत्र विश्वास गर्दछन् तथा म मुसलमानहरूमध्येबाट हूँ ।" (सूर: यूनुस-९०)

अरु काफ़िरहरूको विषयमा भनियो, जब उनीहरूले प्रकोप देखे त भने । "हामी एक अल्लाहमाथि ईमान राख्यौं तथा जसलाई हामी अल्लाहका अंशियार मान्थ्यौं, उनीहरूलाई अस्वीकार गर्दछौं ।" (सूर: अल-मोमिन-८४)
यदि (ولاية) मा (واو) (वाव अक्षर) मुनिज़ेर छ भने त्यसको अर्थ आदेश तथा अधिकार हो, जस्तो कि अनुवादमा यही अर्थ प्रयोग गरिएको छ । (इब्ने कसीर)

[2]अर्थात् त्यही आफ्ना मित्रहरूलाई श्रेष्ठ प्रतिफल दिने तथा राम्रो सुफलबाट सम्मानित गर्ने हो ।

ٱلْمَالُ وَٱلْبَنُونَ زِينَةُ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا ۖ وَٱلْبَـٰقِيَـٰتُ ٱلصَّـٰلِحَـٰتُ خَيْرٌ عِندَ رَبِّكَ ثَوَابًا وَخَيْرٌ أَمَلًا ﴿٤٦﴾

(४६) धन तथा सन्तान त सांसारिक जीवनका शोभा हुन्,[1] तर शेष रहने पुण्य[2] तिम्रो पालनकर्ताको समीप प्रतिफलका लागि तथा (भविष्यको) राम्रा आशाको निम्ति अति उत्तम छन् ।

وَيَوْمَ نُسَيِّرُ ٱلْجِبَالَ وَتَرَى ٱلْأَرْضَ بَارِزَةً وَحَشَرْنَـٰهُمْ فَلَمْ نُغَادِرْ

(४७) तथा जुन दिन हामी पर्वतहरूलाई चलाउने छौं[3] तथा धर्तीलाई बिल्कुलै नग्न देख्नेछौं तथा

हुन्छ त पानी पाएर खेती लहराउँछ तथा बोट एवं वृक्ष नयाँ जीवनबाट प्रफुल्लित हुन्छन्, तर पछि एउटा समय आउँछ जबकि कृषि सुखेर जान्छ, पानी नपाउनको कारण । अथवा फसल पाक्नको कारण त्यस पश्चात बतासहरूले त्यसलाई उडाउँदै लैजान्छन् । हावाको एउटा वेगले कहिले दायाँ र कहिले बायाँतिर मोडदिन्छ । संसारको जीवन पनि हावाको एउटा वेग अथवा पानीका फोका अथवा खेतीको जस्तो छ, जुन आफ्नो केही दिनको रमाइलो देखाएर विनाशमा परिणत हुन पुग्छन् । तथा यी सम्पूर्ण कार्य उसैका हातबाट हुन्छन्, जो एक्लो तथा प्रत्येक कुरो त्यसको अधीन छ । अल्लाह तआ़लाले संसारको यो उदाहरण कुरआन मजीदमा विभिन्न स्थानहरूमा वर्णन गरेको छ । जस्तै सूरः यूनुस-२५, सूरः-जुमर-२१ तथा सूरः हदीद-५० तथा अन्य आयतहरू ।

[1]यसमा संसारका ती लोभीहरूको खण्डन छ, जो संसारका माल तथा सामग्री, वंश, परिवार एवं सन्तानमाथि गर्व गर्दछन्, अल्लाह तआ़लाको यस विषयमा आदेश भयो कि नाशवान संसारका यी कुरा क्षणिक शोभा हुन्, आख़िरतमा यी वस्तुहरू कुनै काम आउने छैनन् । यसैकारण यसभन्दा अगाडी आदेश गर्‍यो कि आख़िरतमा काम लाग्ने कर्म त ती हुन्, जुन शेष रहने हुन् ।

[2](باقيات صالحات) (शेष रहिरहने पुण्य) कुनचाहिं अथवा के-के कुराहरू हुन् ? कसैले नमाज़लाई कसैले अल्लाहको महिमा तथा प्रशंसालाई, कसैले केही अन्य सत्यकर्महरूलाई यसका चरितार्थ मानेका छन् । तर उचित यो हो कि यो सामान्य हो तथा सबै पुण्यहरूलाई सम्मिलित छ । सबै अनिवार्य, आवश्यक सुन्नत एवं ऐच्छिक पुण्य कर्म स्थाई एवं नित्य हुन् बरु निषेधित कार्यहरूबाट बच्नु पनि एउटा सत्कर्म हो, जसमा अल्लाहको तर्फबाट प्रतिफल तथा पुण्यको आशा छ ।

[3]यो क़ेयामतको भयानकता तथा ठूला-ठूला घटनाहरूको वर्णन हो । 'पर्वतहरूलाई चलाउनेछौं' को अर्थ हो पर्वत आफ्ना ठाउँहरूबाट हटेर जानेछन् तथा धुनिएको कपास जस्तै उड्नेछन् । ﴿وَتَكُونُ الْجِبَالُ كَالْعِهْنِ الْمَنْفُوشِ﴾ अन्य स्थानहरूमा हेर्नुस् सूरः तूर-९ तथा १०, सूरः नम्ल-८८ तथा सूरः ताहा-१०५ देखि १०७ सम्म । धर्तीबाट जब पर्वत

مِنْهُمْ أَحَدًا ﴿٤٧﴾

सबै मानिसहरूलाई हामी एकत्रित गर्नेछौं, तिनीहरूमध्ये कसैलाई शेष छाड्ने छैनौं ।[1]

وَعُرِضُوا عَلَىٰ رَبِّكَ صَفًّا لَّقَدْ جِئْتُمُونَا كَمَا خَلَقْنَاكُمْ أَوَّلَ مَرَّةٍ ۚ بَلْ زَعَمْتُمْ أَلَّن نَّجْعَلَ لَكُم مَّوْعِدًا ﴿٤٨﴾

(४८) तथा सबै तिम्रो प्रभुका समक्ष पंक्तिहरूमा उपस्थित गरिनेछन् ।[2] निःसन्देह तिमी हाम्रा समक्ष त्यसैप्रकार आयौ जुनप्रकार हामीले तिमीलाई प्रथम पटक सृष्टि गरेका थियौं तर तिमी त यसै भ्रममा परिरहयौ कि हामीले कहिल्यै तिम्रा लागि कुनै वचनको दिन निर्धारित गर्ने छैनौं ।

وَوُضِعَ الْكِتَابُ فَتَرَى الْمُجْرِمِينَ مُشْفِقِينَ مِمَّا فِيهِ وَيَقُولُونَ يَا وَيْلَتَنَا مَالِ هَٰذَا الْكِتَابِ لَا يُغَادِرُ صَغِيرَةً وَلَا كَبِيرَةً إِلَّا أَحْصَاهَا ۚ وَوَجَدُوا مَا عَمِلُوا حَاضِرًا ۗ وَلَا يَظْلِمُ رَبُّكَ أَحَدًا ﴿٤٩﴾

(४९) तथा कर्मपत्र अगाडी राखिदिइनेछन् अनि तिमी देख्नेछौ कि पापी त्यसका लेखबाट भयभीत भइराखेका हुनेछन् र भनिराखेका हुनेछन् कि अफसोच, हाम्रो नाश यो कस्तो लेख हो, जसले कुनै सानो-ठूलालाई नघेरि छाडेन तथा जे-जति उनीहरूले गरेका थिए सबै उपस्थित पाउनेछन् तथा तिम्रो प्रभुले कसैमाथि अत्याचार तथा अन्याय गर्नेछैन ।

وَإِذْ قُلْنَا لِلْمَلَائِكَةِ اسْجُدُوا

(५०) तथा जब हामीले स्वर्गदूतहरूलाई आदेश गऱ्यौं कि आदमका समक्ष दण्डवत (सजदा)

जस्तो कुरो निरस्त भइहाल्नेछ त भवन, वृक्ष तथा यसैप्रकारका अन्य वस्तुहरूले कसरी आफ्नो अस्तित्व शेष राख्न सक्ने छन ? यसैकारण अगाडी भनियो, "तिमीले धर्तीलाई स्वच्छ खुल्लारूपमा देख्ने छौ ।"

[1]अर्थात् आदि-अन्त्यका साना-ठूला, काफ़िर, मुसलमान सबैलाई एकत्रित गर्नेछौं, कोही पनि धर्तीको सतहमा भएको हुनेछैन तथा न चिहानबाट निस्केर कुनै अन्य स्थानमा लुक्न सक्नेछ ।

[2]यसको अर्थ हो कि एउटै पंक्तिमा अल्लाहका समक्ष उभिनेछन् अथवा पंक्तिबद्ध भएर अल्लाहका सदनमा उपस्थित हुनेछन् ।

لِاٰدَمَ فَسَجَدُوْٓا اِلَّآ اِبْلِيْسَ ۭ كَانَ مِنَ الْجِنِّ فَفَسَقَ عَنْ اَمْرِ رَبِّهٖ ۭ اَفَتَتَّخِذُوْنَهٗ وَذُرِّيَّتَهٗٓ اَوْلِيَاۗءَ مِنْ دُوْنِيْ وَهُمْ لَكُمْ عَدُوٌّ ۭ بِئْسَ لِلظّٰلِمِيْنَ بَدَلًا ۝

गर, त इब्लीसका अतिरिक्त सबैले दण्डवत गरे, यो जिन्नहरूमध्ये थियो, उसले आफ्नो प्रभुका आदेशहरूको अवहेलना गऱ्यो ।[२] के तैपनि तिमी त्यसलाई तथा त्यसका सन्तानलाई, मलाई छाडी आफ्नो मित्र बनाइराखेका छौ, यद्यपि त्यो तिमी सबैको शत्रु हो ?[३] यस्ता अत्याचारीहरूको कति नराम्रो प्रतिफल छ ।[४]

[१]कुर्आनको यो स्पष्ट वर्णन छ कि शैतान ठूलो फरिश्ता थिएन, फरिश्ता भएको भए त अल्लाह तआलाका आदेशहरूको अवहेलनाको साहस नै हुँदैनथ्यो, किनकि फरिश्ताहरूका गुण अल्लाह तआलाले वर्णन गरेको छ ।

﴿ لَّا يَعْصُونَ اللَّهَ مَآ أَمَرَهُمْ وَيَفْعَلُونَ مَا يُؤْمَرُونَ ﴾

"तिनीहरू अल्लाहका आदेशको अवहेलना गर्दैनन् तथा त्यही गर्दछन् जसको उनीहरूलाई आदेश दिइन्छ" । (सूर: अल-तहरीम-६)

यस स्थितिमा यो संदेह रहन्छ, यदि त्यो फरिश्ता थिएन त फेरि त्यो अल्लाहको आदेश बाट सम्बन्धित नै थिएन किनभने यसका सम्बोधित त फरिश्ताहरू थिए, उनीहरूलाई नै नतमस्तक हुने आदेश दिइएको थियो । 'रुहुल मआनी' का लेखकले भनेका छन् कि त्यो फरिश्ता अवश्य थिएन, परन्तु त्यो फरिश्ताहरूसँग रहन्थ्यो तथा तिनीहरूमा गणना हुन्थ्यो, यसकारण त्यो पनि (اسجدوا لآدم) को आदेश सित सम्बोधित थियो तथा आदमका समक्ष नतमस्तकको आदेशसित उसलाई सम्बोधित गरिनु निश्चित छ । अल्लाहको आदेश छ : "जब मैले तिमीलाई आदेश दिएँ त तिमीले सज्दा किन गरेनौ ।" (सूर: अल-आराफ-१२)

[२](فِسق) को अर्थ हुन्छ निस्कनु, मूसा जब आफ्नो दूलोबाट निस्कन्छ त त्यसलाई अरबी भाषामा भन्दछन् (فَسَقَتِ الفَارَةُ مِنْ جُحْرِهَا) । शैतान पनि सम्मान तथा आदर्शसूचक दण्डवत (सज्दा) को आदेशको अवहेलना गरी प्रभुको आज्ञा पालनबाट निस्किहाल्यो ।

[३]अर्थात् के तिम्रोलागि यो उचित छ कि तिमी त्यसता व्यक्तिलाई तथा त्यसको परिवारका सदस्यहरूलाई मित्र बनाउ, जो तिम्रो पितामह आदमको शत्रु, तिम्रो शत्रु हो तथा तिम्रो प्रभुको शत्रु हो तथा अल्लाहलाई छाडि त्यस शैतानको अनुकरण गर ?

[४]एउटा अन्य अनुवाद यसको यो गरिएको छ "अत्याचारीहरूले कति नराम्रो परिणाम अप्नाएका छन् ।" अल्लाहका आदेशहरूको पालन तथा मित्रता छाडेर शैतानको अनुसरण एवं त्यससँग मित्रता गरेका छन् जुन अत्याधिक नराम्रो परिणाम हो जसलाई ती अत्याचारीहरूले अप्नाएका छन् ।

(५१) मैले उनीहरूलाई आकाशहरू तथा धर्तीको उत्पत्तिका समय उपस्थित राखेको थिइन् तथा न स्वयं उनको आफ्नो उत्पत्तिमा ।[१] तथा म विचलित पार्नेहरूलाई आफ्नो सहायक (मद्दत गर्ने) बनाउने पनि होइन ।[२]

مَآ أَشْهَدتُّهُمْ خَلْقَ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ وَلَا خَلْقَ أَنفُسِهِمْ وَمَا كُنتُ مُتَّخِذَ ٱلْمُضِلِّينَ عَضُدًا ﴿٥١﴾

(५२) तथा जुन दिन त्यसले भन्नेछ कि तिम्रा विचारले जो मेरा अंशियार थिए उनीहरूलाई बोलाऊ । यिनीहरूले बोलाउनेछन् तर उनीहरू मध्येबाट कोही उत्तर दिने छैन । तथा हामी उनका मध्य विनाशका साधन बनाइदिनेछौं ।[३]

وَيَوْمَ يَقُولُ نَادُوا۟ شُرَكَآءِىَ ٱلَّذِينَ زَعَمْتُمْ فَدَعَوْهُمْ فَلَمْ يَسْتَجِيبُوا۟ لَهُمْ وَجَعَلْنَا بَيْنَهُم مَّوْبِقًا ﴿٥٢﴾

(५३) तथा पापी नरकलाई देखेर बुझिहाल्ने छन् कि उनीहरू यसैमा जानेछन्, तर त्यसबाट बाँच्ने ठाउँ पाउने छैनन् ।[४]

وَرَءَا ٱلْمُجْرِمُونَ ٱلنَّارَ فَظَنُّوٓا۟ أَنَّهُم مُّوَاقِعُوهَا وَلَمْ يَجِدُوا۟ عَنْهَا مَصْرِفًا ﴿٥٣﴾

[१]अर्थात् आकाश तथा धर्तीको उत्पत्ति तथा त्यसका उपाय, बरु स्वयं यी शैतानहरूको उत्पत्तिमा मैले उनीहरूबाट अथवा उनीहरूमध्ये कुनै एउटाबाट कुनै सहायता लिइन, यी त त्यसबेला उपस्थित थिएनन् । अनि तिमी त्यस शैतान तथा त्यसका परिवारका अन्य सदस्यहरूको पूजा अथवा अनुगमन किन गर्दछौ, जबकि यिनीहरू रचित हुन् तथा म ती सबैको रचयिता हूँ ?

[२]मानौं, यदि मैले उनलाई सहायक बनाउने भए पनि कसरी बनाउँथे जबकि यिनी मेरा भक्तहरूलाई विचलित पारी मेरो स्वर्ग तथा मेरो अनुग्रहबाट रोक्दछन् ।

[३](موبق) को एउटा अर्थ 'पर्दा तथा छेक' गरिएका छन् । अर्थात उनी बीच छेकवार तथा दूरी पारी दिइनेछ, किनभने बीच आपसमा वैमनस्य हुनेछ । यसको अतिरिक्त यसकारण कि हश्रको अवधिमा एक-अर्कासँग सम्पर्क गर्न नसकून् । केही विद्वानहरू भन्दछन् कि यो नरकमा रगत तथा पिपको विशेष घाटी हो । तथा केहीले यसको अनुवाद विनाश गरेका छन् जस्तो कि अनुवादबाट स्पष्ट छ अर्थात यी मूर्तिपूजक तथा तिनका स्वरचित देवता, यी एक-अर्कालाई भेट्न सक्ने छैनन् किनकि उनका बीच विनाशका साधन तथा भयानक कुराहरू हुनेछन् ।

[४]जुनप्रकार केही कथनहरूमा छ कि काफ़िर अझै चालिस वर्षको दूरीमा हुँदा विश्वास गरिहाल्नेछ कि नरक त्यसको वासस्थान हो । (मसनद अहमद भाग-३, पृष्ठ-७५)

(५४) तथा हामीले यस कुर्आनमा विभिन्न प्रकारले सबै उदाहरण मानिसहरूका लागि वर्णन गरिदिएका छौं, तर सबै कुराहरूभन्दा बढी झगडा गर्ने (कलह प्रिय) मानव छ ।[1]

وَلَقَدْ صَرَّفْنَا فِي هَٰذَا الْقُرْآنِ لِلنَّاسِ مِن كُلِّ مَثَلٍ ۚ وَكَانَ الْإِنسَانُ أَكْثَرَ شَيْءٍ جَدَلًا ﴿٥٤﴾

(५५) मानिसहरू छेउ मार्गदर्शन आइसके पश्चात उनीहरूलाई ईमान स्थापित गर्न तथा आफ्नो प्रभुसित क्षमा-याचना गर्नबाट मात्र यसै कुराले रोक्यो कि पूर्वजहरूको जस्तो व्यवहार उनीहरूसित पनि होस् ।[2] अथवा उनको सामू प्रत्यक्ष प्रकोप आइपुगोस् ।[3]

وَمَا مَنَعَ النَّاسَ أَن يُؤْمِنُوا إِذْ جَاءَهُمُ الْهُدَىٰ وَيَسْتَغْفِرُوا رَبَّهُمْ إِلَّا أَن تَأْتِيَهُمْ سُنَّةُ الْأَوَّلِينَ أَوْ يَأْتِيَهُمُ الْعَذَابُ قُبُلًا ﴿٥٥﴾

(५६) तथा हामी त आफ्ना रसूलहरूलाई यसकारण पठाउँछौं ताकि उनीहरू शुभ-सूचना सुनाइदेऊन् तथा सावधान गरिदेऊन् । काफिरहरू असत्यलाई प्रमाण बनाइ झगडा चाहन्छन् कि यसबाट सत्यलाई कमजोर पारिदेऊन्, उनीहरू मेरा आयत (मन्त्रहरू)

وَمَا نُرْسِلُ الْمُرْسَلِينَ إِلَّا مُبَشِّرِينَ وَمُنذِرِينَ ۚ وَيُجَادِلُ الَّذِينَ كَفَرُوا بِالْبَاطِلِ لِيُدْحِضُوا بِهِ الْحَقَّ ۖ وَاتَّخَذُوا آيَاتِي

[1]अर्थात् हामीले मनुष्यहरूलाई सत्यमार्ग बुझाउन कुर्आनमा प्रत्येक विधिको प्रयोग गरेका छौं, भाषण तथा वर्णन, उदाहरण तथा घटनाहरू तथा प्रमाण एवं लक्षणहरू, यसका अतिरिक्त उनीहरूलाई पटक-पटक विभिन्न प्रकारले वर्णन गरेका छौं, तर मनुष्य अत्याधिक झगडालु छ, यसकारण शिक्षा एवं उपदेशको त्यसमाथि न प्रभाव हुन्छ तथा न प्रमाण एवं निशानीहरू त्यसका लागि प्रभावकारी हुन्छन् ।

[2]अर्थात् झुट्लाउनुको अवस्थामा उनीमाथि पनि प्रकोप त्यसैप्रकार आओस् जुनप्रकार यिनीभन्दा पूर्वका समुदायहरूमाथि आयो ।

[3]अर्थात् यी मक्कावासी ईमान क़ायम गर्न यी दुई कुराहरूमध्ये कुनै एउटाको प्रतीक्षामा छन् । तर यी मूर्खहरूको बुद्धिमा यो आउँदैन कि त्यस पश्चात ईमान क़ायम गर्नु कुनै लाभ छैन अथवा त्यस पश्चात उनलाई ईमानको अवसर प्राप्त हुनेछ ?

وَمَآ أُنْذِرُوْا هُزُوًا ﴿٥٦﴾

तथा जुन कुरोबाट तर्साइन्छ, त्यसलाई उपहासमा उडाइदिन्छन् ।[1]

وَمَنْ أَظْلَمُ مِمَّنْ ذُكِّرَ بِآيَاتِ رَبِّهِ فَأَعْرَضَ عَنْهَا وَنَسِيَ مَا قَدَّمَتْ يَدَاهُ ۚ إِنَّا جَعَلْنَا عَلَىٰ قُلُوبِهِمْ أَكِنَّةً أَنْ يَفْقَهُوهُ وَفِي آذَانِهِمْ وَقْرًا ۖ وَإِنْ تَدْعُهُمْ إِلَى الْهُدَىٰ فَلَنْ يَهْتَدُوا إِذًا أَبَدًا ﴿٥٧﴾

(५७) तथा त्यसभन्दा बढी अत्याचारी को होला जसलाई त्यसको प्रभुका आयतहरूद्वारा शिक्षा दिइयोस्, त्यो तैपनि मुख फर्काएको होस्, तथा जे-जति त्यसका हातहरूले अगाडी पठाएका छन् त्यसलाई बिर्सिदिआस् ? निःसन्देह हामीले उनका हृदयमा आवरण राखिदिएका छौं कि उनीहरू त्यसलाई बुझ्न नसकून् र उनका कानहरूमा बोझ हालिदिएका छौं कि त्यसलाई उनीहरू नसुनून्, यद्यपि तिमी उनीहरूलाई सोझो मार्गतिर बोलाउँदै रहन्छौ, तर यिनी कहिल्यै पनि मार्गदर्शन पाउने छैनन् ।[2]

وَرَبُّكَ الْغَفُورُ ذُو الرَّحْمَةِ ۖ لَوْ يُؤَاخِذُهُمْ بِمَا كَسَبُوا لَعَجَّلَ لَهُمُ الْعَذَابَ ۚ بَلْ لَهُمْ مَوْعِدٌ

(५८) तिम्रो पालनकर्ता अति क्षमावान् एवं कृपानिधि छ, त्यसले यदि उनीहरूलाई त्यसमा समात्न खोजेको भए,जुन कि उनीहरूले कमाएका छन् त उनीमाथि शीघ्र नै यातना ल्याइदिन्थ्यो । होइन, बरु उनका लागि त वाचा (वायदा) को समय

[1]तथा अल्लाहका आयतहरूको उपहास गर्नु, यो झुट्लाउनुको निम्नस्तर हो । यसैप्रकार कुरीति, कुचालबाट सत्यलाई असत्य सिद्ध गर्नुको प्रयत्न गर्नु पनि अति निन्दनीय हो । कुरीतिद्वारा झगड्नुको एउटा रूप यो हो जुन काफ़िर रसूलहरूलाई यो भनेर उनको रिसालतलाई अस्वीकार गर्दैरहे कि तिमी त हामीहरू जस्तै मनुष्य नै हौ । (ما أنتم إلا بشر مثلنا) (सूर: यासीन-१५) हामीले तिमीलाई कसरी रसूल मानौं ? (دحض) को मूल अर्थ चिप्लनु हो । अरबी भाषामा भनिन्छ (دحضت رجله) (त्यसका खुट्टा चिप्ले) यहाँबाट यो कुनै वस्तुको पतन (हट्नु) तथा (بطلان) को अर्थमा प्रयोग हुन लाग्यो । भन्दछन् (دحضت حُجَّتُهُ دُحوضاً أي : بطلت) (उसको तर्क असत्य सिद्ध भइहाल्यो) यस आधारमा (أدحض يدحض) को अर्थ हुनेछ असत्य गर्नु । (फ़तहुल क़दीर)

[2]अर्थात् उनीहरूका यस अत्याधिक घोर अत्याचारका कारण उनीहरूले प्रभुका आयतहरूबाट मुख फर्काए तथा आफ्नो क्रियाकलापहरूलाई बिर्से, उनका हृदयमा यस्ता आवरण तथा उनका कानमा यस्ता बोझ पारिए जसबाट कुरआन बुझ्नु, सुन्नु तथा त्यसबाट मार्गदर्शन प्राप्त गर्नु उनको लागि असम्भव भइहाल्यो । उनलाई जति पनि सत्यतिर बोलाउ यी कहिले पनि सत्यको मार्ग अपनाउनको निम्ति तयार हुनेछैन ।

لَّن يَجِدُوا مِن دُونِهِ مَوْئِلًا ۝٥٨

निर्धारित छ जसबाट उनी कहिल्यै भाग्ने ठाउँ पाउने छैनन् ।[1]

وَتِلْكَ الْقُرَىٰ أَهْلَكْنَاهُمْ لَمَّا ظَلَمُوا وَجَعَلْنَا لِمَهْلِكِهِم مَّوْعِدًا ۝٥٩

(५९) तथा यी हुन् ती बस्तीहरू जसलाई हामीले तिनका अत्याचारका कारण ध्वस्त गरिदियौं तथा उनीहरूको विनाशको एउटा समय हामीले निर्धारित गरिसकेका थियौं ।[2]

[1]अर्थात् यो त क्षमावान् पालनकर्ताको कृपा हो कि त्यसले पापमा तुरून्तै पकड गर्दैन बरु अवसर प्रदान गर्दछ, यदि यस्तो नभएको भए आफ्ना कर्महरूका कारण प्रत्येक व्यक्ति अल्लाहका यातनाहरूका पन्जामा जकडिएको हुन्थ्यो । तर यो अवश्य छ कि जब यस अवसरको अवधि समाप्त हुन्छ तथा विनाशको त्यो समय आइपुग्छ जुन अल्लाहले निर्धारित गरेको छ त भाग्नुको कुनै मार्ग तथा रक्षाको कुनै विधि उनका लागि शेष रहँदैन । (موئل) (मोइल) को अर्थ शरणागर, भाग्नुको वाटो ।

[2]यसबाट तात्पर्य आद, समूद, आदरणीय शुऐब तथा आदरणीय लूत आदिका समुदाय हुन्, जो हिजाजका क्षेत्रका निकट तथा उनका मार्गहरूमा आवाद थिए । उनीहरूलाई पनि यद्यपि उनका अत्याचारकै कारण नाश गरियो तर विनाशभन्दा पूर्व उनीहरूलाई पनि पूर्ण अवसर प्रदान गरियो तथा जव यो कुरो सिद्ध भइहाल्यो कि अत्याचार तथा क्रुरता यस चरम सीमासम्म पुगे, जहाँवाट मार्गदर्शन असम्भव हुन जान्छन् तथा उनीहरूबाट पुण्य तथा भलाईको आशा शेष रहेन त पुनः उनीवाट कर्म गर्नको अवसर समाप्त तथा विनाशको समय प्रारम्भ भयो । अनि उनीहरूलाई सधैंका लागि समाप्त गरियो कि मानौं उनको अस्तित्व नै रहेको थिएन । अर्थात् संसारका मानिसहरूका लागि शिक्षा प्राप्त गर्नको निम्ति नमूना वनाइदियो । यो वास्तवमा मक्कावासीहरूलाई बुझाइदैछ कि तिमी हाम्रा अन्तिम नवी सर्वश्रेष्ठ रसूल आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई झुट्लाइराखेका छौ, तिमी यो नठान्नु कि तिमीलाई यो जुन अवसर प्राप्त भइराखेको छ यसको अर्थ यो हो कि तिमीसित कोही सोधपूछक छैन । बरु यो अवसर अल्लाहको नियम हो, जुन एउटा निर्धारित समयसम्म प्रत्येक व्यक्ति, गुट तथा समुदायलाई त्यो प्रदान गर्दछ । जब यो अवधि समाप्त हुनेछ तथा तिमी आफ्नो कुफ्र तथा विरोधमा रोकिने छैनौ भने तिम्रो अन्त पनि त्यसभन्दा भिन्न हुने छैन, जुन तिमीभन्दा पूर्वका समुदायहरूलाई भइसकेको छ ।

وَإِذْ قَالَ مُوسَىٰ لِفَتَىٰهُ لَآ أَبْرَحُ حَتَّىٰٓ أَبْلُغَ مَجْمَعَ ٱلْبَحْرَيْنِ أَوْ أَمْضِىَ حُقُبًا ﴿٦٠﴾

(६०) तथा जब मूसाले आफ्नो नवयुवकसित भने[1] म त हिंड्दैरहने छु, जबसम्म दुई नदीहरूको संगम[2] को स्थानमा पुग्दिन, चाहे मलाई वर्षौं हिंड्नु परोस् ।[3]

فَلَمَّا بَلَغَا مَجْمَعَ بَيْنِهِمَا نَسِيَا حُوتَهُمَا فَٱتَّخَذَ سَبِيلَهُۥ فِى ٱلْبَحْرِ سَرَبًا ﴿٦١﴾

(६१) जब ती दुईटै त्यहाँ पुगे जहाँ दुईटै नदीहरूको संगमको स्थान थियो, त्यहाँ आफ्नो माछाबारे बिर्से, जसले नदीमा सुरुङ्ग जस्तो आफ्नो मार्ग बनायो ।

فَلَمَّا جَاوَزَا قَالَ لِفَتَىٰهُ ءَاتِنَا غَدَآءَنَا لَقَدْ لَقِينَا مِن سَفَرِنَا

(६२) जब दुबै त्यहाँबाट अगाडी बढे तब मूसाले नवयुवकसित भने कि हाम्रो अल्पाहार

---

[1]नवयुवकसित तात्पर्य आदरणीय यूशआ बिन नून हुन् जो मूसाको मृत पश्चात उनका उत्तराधिकारी बने ।

[2]यस स्थानको निर्धारण कुनै निश्चित प्रमाणबाट हुनसकेको छैन तैपनि निकटताको आधारमा यसबाट तात्पर्य सिनाईको मरुस्थलको दक्षिणी किनारा हो जहाँ अक्वाको खाडी तथा स्वेज़को खाडी दुबै आएर मिल्छन् तथा लाल सागरमा गई विलीन हुन्छन् । अन्य स्थान जसको वर्णन व्याख्याकारहरूले गरेका छन्, उनीमाथि कुनै प्रकारले दुई सागरहरूको संगमको कथन सिद्ध हुँदैन ।

[3](حقب) (होकुब) को एउटा अर्थ सत्तरी तथा अस्सी वर्ष तथा दोस्रो अर्थ अनिश्चितकालको अवधि हो, यहाँ यही दोस्रो अर्थ तात्पर्य हो । अर्थात् जबसम्म दुई सागरहरूको संगमसम्म पुग्दिन, हिंडिरहन्छु तथा यात्रा निरन्तर जारी राख्नेछु, चाहे जति समय किन नलागोस् । आदरणीय मूसालाई यस यात्राको आवश्यकता यसकारण भयो कि उनले एउटा अवसरमा एउटा प्रश्नकर्ताको उत्तरमा भनिदिए कि यस समय मभन्दा ठूलो ज्ञानी कोही छैन । अल्लाह तआलालाई उनको यो कथन राम्रो लागेन तथा प्रकाशना (वह्यी) द्वारा उनलाई भनियो कि हाम्रो एउटा भक्त (ख़िज्र) छ, जो तिमीभन्दा पनि अधिक ज्ञानी छ । आदरणीय मूसाले सोधे कि हे अल्लाह ! त्योसँग भेट कसरी हुनसक्दछ ? अल्लाहले आदेश गर्‍यो कि जहाँ दुई समुद्र मिल्छन् त्यहीं हाम्रो त्यो भक्त हुनेछ । यस अतिरिक्त आदेश गर्‍यो कि माछा साथमा लैजाउ जहाँ तिम्रो टोकरीबाट निस्कि हराउँछ त बुझिहाल्नु कि त्यही स्थान हो । (सहीह बुख़ारी तफ़सीर सूर: अल-कहफ़) अत: यस आदेश अनुसार एउटा माछा लिए तथा यात्रा प्रारम्भ गरिदिए ।

هٰذَا نَصَبًا ﴿٦٢﴾

देउ, हामीले आफ्नो यस यात्रामा अत्याधिक कठिनाई भोग्नु पऱ्यो ।

قَالَ اَرَءَيْتَ اِذْ اَوَيْنَآ اِلَى الصَّخْرَةِ فَاِنِّيْ نَسِيْتُ الْحُوْتَ وَمَآ اَنْسٰنِيْهُ اِلَّا الشَّيْطٰنُ اَنْ اَذْكُرَهٗ ۚ وَاتَّخَذَ سَبِيْلَهٗ فِي الْبَحْرِ ۖ عَجَبًا ﴿٦٣﴾

(६३) (उसले) उत्तर दियो कि के तपाईंले देख्नु पनि भयो ? जब हामीले ढुङ्गामा टेकेर विश्राम गरिराखेका थियौं, त्यहीं म माछा बिर्सेको थिएँ, वास्तवमा शैतानले मलाई विचलित पारिदियो कि म तपाईंसित यसको चर्चा गरूं । त्यस माछाले एउटा विचित्र रूपले नदी[1] मा आफ्नो मार्ग बनायो ।

قَالَ ذٰلِكَ مَا كُنَّا نَبْغِ ۖ فَارْتَدَّا عَلٰٓى اٰثَارِهِمَا قَصَصًا ﴿٦٤﴾

(६४) (मूसाले) भने यही थियो जसको खोजीमा हामी थियौं, त त्यहींबाट आफ्ना पदचिन्हहरूलाई खोज्दै फर्के ।[2]

فَوَجَدَا عَبْدًا مِّنْ عِبَادِنَآ اٰتَيْنٰهُ رَحْمَةً مِّنْ عِنْدِنَا وَعَلَّمْنٰهُ

(६५) अनि हाम्रा भक्तहरूमध्ये एउटा भक्त[3] लाई पायौं, जसलाई हामीले आफ्नो तर्फबाट विशेष

---

[1]अर्थात् माछा जीवित भई समुद्रमा फर्किहाल्यो तथा त्यसको लागि अल्लाह तआलाले समुद्रमा सुंगुरको जस्तो मार्ग बनाइदियो । आदरणीय यूशआले माछालाई समुद्रमा जाँदा र मार्ग बनाउँदा देखे, तर आदरणीय मूसालाई भन्न बिर्सिहाले यहाँसम्मकि विश्राम गरी त्यहाँबाट पुन: यात्रा प्रारम्भ गरे । त्यस दिन तथा त्यसका पश्चात रात्रिको यात्रा गरेर जब दोस्रो दिन आदरणीय मूसालाई थकाई तथा भोगको संवेदन भयो तथा आफ्नो नवयुवक साथीसँग भने कि ल्याउ अल्पहार गरौं । उसले उत्तर दियो, माछा त जहाँ हामीले ढुङ्गामा टेकेर विश्राम गरेका थियौं, त्यहाँ जीवित भई समुद्रमा गइहालेको थियो तथा त्यहाँ विचित्ररूपले उसले आफ्नो मार्ग बनाएको थियो, जसको म तपाईंसित चर्चा गर्न बिर्से तथा शैतानले मलाई विचलित गरिदियो ।

[2]आदरणीय मूसाले भन्यो,"अल्लाहको भक्त ! जहाँ माछा जीवित भई हराउनु थियो त्यहीं त हाम्रो लक्ष्य थियो जसको खोजीमा हामी यात्रा गरिराखेका छौं । अत: अब पदचिन्ह हेर्दै फिर्ता भयो तथा त्यसै दुई सागरहरूको संगमको स्थानमा आइपुग्यो । (قصصا) (कससन्) को अर्थ हो पछि लाग्नु, पछि-पछि हिंड्नु अर्थात् पदचिन्ह हेर्दै तिनका पछाडी हिंड्दै गरे ।

[3]त्यस भक्तसित तात्पर्य आदरणीय खीज्र हुन्, जस्तो कि सहीह हदीसहरूमा स्पष्टीकरण छ । खीज्रको अर्थ हरियाली हो । उनी एकपटक धर्तीमा बसे त त्यो धर्तीको टुक्रा तलबाट हरियाली बनेर झुम्न थाल्यो, यसैकारण उनको नाम

مِن لَّدُنَّا عِلۡمًا ﴿٦٥﴾

कृपा[1] प्रदान गरेका थियौं तथा उसलाई आफ्नो पासबाट विशेष[2] ज्ञान सिकाएका थियौं ।

قَالَ لَهُۥ مُوسَىٰ هَلۡ أَتَّبِعُكَ عَلَىٰٓ أَن تُعَلِّمَنِ مِمَّا عُلِّمۡتَ رُشۡدًا ﴿٦٦﴾

(६६) त्यससित मूसाले भने कि म तपाईंको पालन गरुँ कि तपाईं मलाई त्यस सत्य ज्ञानलाई सिकाइदिनुस्, जुन तपाईंलाई सिकाइएको छ ?

قَالَ إِنَّكَ لَن تَسۡتَطِيعَ مَعِيَ صَبۡرًا ﴿٦٧﴾

(६७) उसले भन्यो तपाईं हामीसँग कदापि धैर्य राख्न सक्नुहुन्न ।

وَكَيۡفَ تَصۡبِرُ عَلَىٰ مَا لَمۡ تُحِطۡ بِهِۦ خُبۡرًا ﴿٦٨﴾

(६८) तथा जुन कुरोलाई तपाईंले आफ्नो ज्ञानमा[3] लिनुभएको छैन त्यसमा धैर्य राख्न पनि कसरी सक्नुहुन्छ ?

---

ख़िज्र पर्नगयो । (सहीह बुख़ारी तफ़सीर सूर: अल-कहफ़)

[1]कृपासित केही व्याख्याकारहरूले ती विशेष उपहार तात्पर्य लिएका छन्, जुन अल्लाहले आफ्नो त्यस विशेष भक्तलाई प्रदान गऱ्यो तथा अधिकतर व्याख्याकारहरूले यसबाट तात्पर्य नबूअत (ईशदूतत्व) लिएका छन् ।

[2]त्यसबाट नबूअतको ज्ञानका अतिरिक्त जससित आदरणीय मूसापनि परिचित थिए, केही उत्पत्तिसित सम्बन्धित कुराहरूको ज्ञान छ जसलाई अल्लाह तआलाले केवल आदरणीय ख़िज्रलाई प्रदान गरेको थियो, आदरणीय मूसासित त्यो ज्ञान थिएन । यसबाट भावार्थ निकाल्दै केही सूफी (योगी) दावी गर्दछन् कि अल्लाह तआला केही मानिसहरूलाई जो नबी हुँदैनन् (علم لدني) (इल्मे लदुन्नी) सित सुशोभित गर्दछ, जुन बिना गुरू अल्लाहको कृपाले प्राप्त हुन्छ तथा यो आध्यात्मिक ज्ञान धार्मिक नियमहरूबाट भिन्न एवं विरुद्ध हुन्छ । परन्तु यो भावार्थ यसकारण उचित छैन कि आदरणीय ख़िज्रको विषयमा त अल्लाह तआलाले स्वयं उनलाई विशेष ज्ञान प्रदान गरेको स्पष्ट गरिदिएको छ जबकि कुनै अन्यको लागि यस्तो स्पष्टीकरण कहीं छैन, यदि यसलाई सामान्य गरिन्छ भने प्रत्येक जादूगरले यसप्रकारको दावी गर्न सक्दछ, यस सम्प्रदायमा यस्ता दावी सामान्य छन् । अत: यस्ता दावीहरूको कुनै औचित्य छैन ।

[3]अर्थात् जसको पूर्ण ज्ञान हुँदैन ।

قَالَ سَتَجِدُنِيٓ إِن شَآءَ ٱللَّهُ صَابِرًا وَلَآ أَعۡصِي لَكَ أَمۡرًا ﴿٦٩﴾

(६९) मूसाले उत्तर दिए कि अल्लाहले चाहयो भने तपाईं मलाई धैर्यवान पाउनु हुनेछ तथा कुनै कुरामा तपाईंको अवज्ञा गर्नेछैन ।

قَالَ فَإِنِ ٱتَّبَعۡتَنِي فَلَا تَسۡـَٔلۡنِي عَن شَيۡءٍ حَتَّىٰٓ أُحۡدِثَ لَكَ مِنۡهُ ذِكۡرًا ﴿٧٠﴾

(७०) (उसले) भन्यो कि यदि तपाईं मेरो साथमै हिंड्न पुनराग्रह गर्नुहुन्छ भने ध्यान रहोस् कि कुनै वस्तुको सम्बन्धमा मसित केही नसोध्नु जबसम्म म त्यसको सम्बन्धमा स्वयं न भनूँ ।

فَٱنطَلَقَا حَتَّىٰٓ إِذَا رَكِبَا فِي ٱلسَّفِينَةِ خَرَقَهَاۖ قَالَ أَخَرَقۡتَهَا لِتُغۡرِقَ أَهۡلَهَا لَقَدۡ جِئۡتَ شَيۡـًٔا إِمۡرًا ﴿٧١﴾

(७१) अनि ती दुबै हिंडे यहाँसम्मकि एउटा डुङ्गामा सवार भए, (खिज्रले त्यसमा प्वाल पारिदिए ! (मूसाले) भने कि तपाईं त्यसमा चिरा पारिदिनु भएको छ ताकि डुङ्गावालाहरूलाई डुबाइदिनुस्, तपाईंले त बडो अनुचित[1] काम गर्नुभो ।

قَالَ أَلَمۡ أَقُلۡ إِنَّكَ لَن تَسۡتَطِيعَ مَعِيَ صَبۡرًا ﴿٧٢﴾

(७२) (खिज्रले) उत्तर दिनुभयो कि मैले त पहिला नै तिमीसित भनिदिएको थिए कि तिमी मेरो साथमा कदापि धैर्य राख्न सक्ने छैनौ ।

قَالَ لَا تُؤَاخِذۡنِي بِمَا نَسِيتُ وَلَا تُرۡهِقۡنِي مِنۡ أَمۡرِي عُسۡرًا ﴿٧٣﴾

(७३) (मूसाले) उत्तर दिए कि मेरो भुलमा मलाई नसमात्नुस् तथा मलाई मेरो विषयमा कठिनाईमा नपार्नुस् ।[2]

[1]आदरणीय मूसालाई यस विशेष ज्ञानको सूचना थिएन जसको आधारमा खिज्रले डुङ्गाका तख्ता भाँचि प्वाल पारिदिएका थिए, यसकारण धैर्य राख्न सकेनन् तथा आफ्नो ज्ञान तथा बुद्धिको आधारमा यसलाई अत्यन्त भयानक कार्य भने । (إمرا) (इमरा) को अर्थ हो (الداهية العظيمة) "अत्यन्त भयानक कार्य ।"

[2]अर्थात् मसँग कोमल व्यवहार गर्नुस्, कठोरताको होइन ।

فَانْطَلَقَا ۗ حَتّٰٓى اِذَا لَقِيَا غُلٰمًا فَقَتَلَهٗ ۙ قَالَ اَقَتَلْتَ نَفْسًا زَكِيَّةًۢ بِغَيْرِ نَفْسٍ ۭ لَقَدْ جِئْتَ شَيْـًٔا نُّكْرًا ۝

(७४) अनि दुबै हिंडे, यहाँसम्मकि एउटा बालक[1] लाई फेला पारे, (ख़िज़्रले) त्यसलाई मारिदिए, (मूसाले) सोधे कि के तपाईंले एउटा पवित्र आत्मालाई बिना कुनै प्रतिहत्या मारिदिनु भो ? निःसन्देह तपाईंले त बडो नराम्रो कुरो गर्नुभयो ।[2]

[1]गुलामसित तात्पर्य वयस्क नवयुवक पनि हुनसक्छ तथा अल्पवयस्क बालक पनि ।

[2](نُكراً، فظيعا منكرا لا يعرف في الشرع) यस्तो ठूलो नराम्रो कार्य जसको धार्मिक नियममा स्थान छैन । केही ज्ञाताहरूले भने कि यसको अर्थ (أنكر من الأمر الأول) प्रथम कार्य (डुङ्गाका तख्ता भाँचि प्वाल पार्नु) भन्दा अधिक नराम्रो कार्य । यसकारण कि हत्या यस्तो कार्य हो जसको क्षतिपूर्ति तथा समापन गर्नु असम्भव छ जबकि डुङ्गाका तख्ता उखेलेर फालिदिनु, यस्तो कार्य हो जसको पूर्ति तथा समापनको साधन छ । केही व्याख्याकारहरूले यसका अर्थ निकालेका छन्, प्रथम कार्यभन्दा कम, यसकारण कि एक प्राणको हत्या गर्नु पुरै डुङ्गामा सवार यात्रीहरूलाई डुबाइदिनुभन्दा कम छ (फ़तहुल क़दीर) । तर प्रथम भावार्थ नै उचित छ किनभने आदरणीय मूसालाई जुन धार्मिक नियमहरूको ज्ञान प्राप्त थियो, त्यसको आधारमा आदरणीय ख़िज़्रको यो कार्य कुनै पनि प्रकारले नियमको विरूद्ध थियो जसको आधारमा उनले विरोध गरे तथा त्यसलाई अत्याधिक नराम्रो कार्य भने ।

قَالَ أَلَمْ أَقُل لَّكَ إِنَّكَ لَن تَسْتَطِيعَ مَعِيَ صَبْرًا ﴿٧٥﴾

(७५) उनी भन्नलागे कि मैले के तिमीसित भनेको थिइन कि तिमी मसँग रहेर कदापि धैर्य राख्न सक्दैनौं ।

قَالَ إِن سَأَلْتُكَ عَن شَيْءٍ بَعْدَهَا فَلَا تُصَاحِبْنِي ۖ قَدْ بَلَغْتَ مِن لَّدُنِّي عُذْرًا ﴿٧٦﴾

(७६) मूसाले जवाफ दिए यदि अब यस पश्चात म तपाईंसँग कुनै वस्तुको विषयमा प्रश्न गर्छु भने नि:सन्देह तपाईं मलाई आफूसँग नराख्नु होला, नि:सन्देह मेरो तर्फबाट[1] तपाईं कारणसम्म पुगिसक्नु भयो ।

فَانطَلَقَا حَتَّىٰ إِذَا أَتَيَا أَهْلَ قَرْيَةٍ اسْتَطْعَمَا أَهْلَهَا فَأَبَوْا أَن يُضَيِّفُوهُمَا فَوَجَدَا فِيهَا جِدَارًا يُرِيدُ أَن يَنقَضَّ فَأَقَامَهُ ۖ قَالَ

(७७) फेरि दुबै हिंडे, एउटा गाउँवासीहरुको पासमा आइ उनीहरुसित भोजन माँगे, उनीहरुले तिनीहरुलाई अतिथि सत्कारबाट इन्कार गरिदिए,[2] दुबैले त्यहाँ एउटा भित्तो फेला परे, जुन ढल्नै लागेको थियो, उसले त्यसलाई सोझो पारिदियो[3] (मूसा)

[1]अर्थात् यदि अब प्रश्न गर्छु भने आफ्नो साथमा राख्ने सौभाग्यबाट मलाई बञ्चित गरिदिनुस्, मलाई कुनै आपत्ति हुनेछैन, किनकि तपाईंसित उचित कारण हुनेछ ।

[2]अर्थात् यो कन्जुस तथा नीच मानिसहरुको वस्ती थियो कि अतिथिहरुको सत्कार नै अस्वीकार गरिदियो, जबकि वास्तवमा यात्रीहरुलाई खाना खुवाउनु तथा अतिथि सत्कार गर्नु प्रत्येक धर्म-विधानको नैतिक शिक्षाको महत्वपूर्ण अङ्ग रहिआएको छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि अतिथि सत्कार तथा अतिथिहरुको सम्मानलाई ईमानको भाग भन्नुभएको छ । भन्नुभएको छ :

«مَنْ كَانَ يُؤْمِنُ بِاللهِ وَالْيَوْمِ الآخِرِ، فَلْيُكْرِمْ ضَيْفَهُ»

"जो अल्लाह तथा आख़िरतको दिनमा ईमान राख्दछ, उसलाई आवश्यक छ कि अतिथिको आदर तथा सत्कार गरोस् ।" (हदीसको संग्रह बुख़ारी र मुस्लिम)

[3]आदरणीय ख़िज़्रले त्यस भित्तालाई हातले स्पर्श गरे तथा चमत्कारिक रुपले सोझो भइहाल्यो जस्तो कि सहीह बुख़ारीको कथनबाट स्पष्ट छ ।

لَوْ شِئْتَ لَتَّخَذْتَ عَلَيْهِ أَجْرًا ﴿٧٧﴾

भन्नथाले यदि तपाईंले चाहेको भए त त्यसको ज्याला लिन सक्नुहुन्थ्यो ।[1]

قَالَ هَٰذَا فِرَاقُ بَيْنِي وَبَيْنِكَ ۚ سَأُنَبِّئُكَ بِتَأْوِيلِ مَا لَمْ تَسْتَطِع عَّلَيْهِ صَبْرًا ﴿٧٨﴾

(७८) उसले भन्यो यो मेरो तथा तिम्रोमध्ये[2] बिछोड हो, अब म तिमीलाई यी कुराहरुको वास्तविकता पनि भन्नेछु, जसमाथि तिमीले धैर्य राख्न सकेनौं ।[3]

[1]आदरणीय मूसा जो वस्तीवालाहरुका व्यवहारबाट अघि नै लुक्थे, आदरणीय ख़ीज्रबाट बिना ज्याला उपकारमाथि मौन रहन सकेनन् तथा भनिहाले कि जब यी वस्तीवालाहरुले हाम्रो यात्रा आवश्यकता तथा आदर तथा सत्कार कुनै कुरामाथि पनि ध्यान दिएनन् भने उपकारका लागि यिनीहरु कसरी योग्य छन् ?

[2]आदरणीय खि़ज्रले भने हे मूसा, यो तेस्रो अवसर हो कि तिमी सहन गर्न सकेनौं तथा अब स्वयं तिमीले भने अनुसार म तिमीलाई साथमा राख्न विवश छु ।

[3]तर बिछोडभन्दा पूर्व आदरणीय खि़ज्रले तिनैवटा घटनाहरुको वास्तविकताबाट उनलाई अवगत तथा सूचित गर्न आवश्यक ठाने, ताकि मूसा कुनै शंकामा नपरुन् तथा उनी यो बुझिहालून् कि नबूअतको ज्ञान अन्य हो, जसबाट उनलाई शुशोभित गरिएको छ तथा केही उत्पत्तिको विषयको ज्ञान अर्कै हो, जुन अल्लाहको इच्छा एवं ज्ञानको अधीन छ, जसको ज्ञान, आदरणीय खि़ज्रलाई दिइएको छ तथा त्यसैको अनुसार उनले यस्ता काम गरे जुन धार्मिक नियमानुसार उचित थिएन तथा यसैले आदरणीय मूसा उचितरुपले तिनीमाथि मौन रहन सकेका थिएनन् । यिनै प्राकृतिक नियमलाई पूर्ण गर्नुको परिणामबाट थिएन तथा यसकारण उनीहरु उनको नबूअत, रिसालत, अथवा विलायतको विवादमा पर्दैनन् किनभने यी सारा पद त मनुष्यहरुका साथमा नै विशेषरुपले रहिआएका छन् । उनीहरु भन्छन् कि उनी फरिश्ता थिए परन्तु यदि अल्लाह तआला आफ्नो कुनै नबीलाई केही उत्पत्तिका नियमहरुबाट अवगत गरेर उनीद्वारा यो कार्य गराउँछ भने यो पनि कुनै असम्भव कुरो होइन । जब त्यो प्रकाशना प्राप्तकर्ता स्वयं यस कुराको स्पष्टीकरण गरिदिन्छ कि मैले यो कार्य अल्लाहको आदेशबाट नै गरेको छु, त यद्यपि प्रत्यक्षरुपले धार्मिक नियमहरुका विरुद्ध देखिन्छन्, तर जब उनको सम्बन्ध प्राकृतिक नियमहरुसित छ त त्यहाँ मान्य तथा अमान्यमाथि कुनै विवाद आवश्यक छैन । जस्तै प्राकृतिक नियमहरुका अर्न्तगत कोही रोगी हुन्छ, कोही मर्छ, कसैको व्यापार नाश भइदिन्छ, समुदायहरुमाथि प्रकोप आउँछ । यिनीहरुमध्ये केही कार्य कैयन् पटक अल्लाहको आज्ञा अनुसार फरिश्ताहरु नै गर्दछन्, त जुनप्रकार यी कुराहरु कसैलाई आजसम्म धार्मिक नियमहरुका विरुद्ध देखिएनन्,

أَمَّا السَّفِينَةُ فَكَانَتْ لِمَسَٰكِينَ يَعْمَلُونَ فِي الْبَحْرِ فَأَرَدتُّ أَنْ أَعِيبَهَا وَكَانَ وَرَاءَهُم مَّلِكٌ يَأْخُذُ كُلَّ سَفِينَةٍ غَصْبًا ﴿٧٩﴾

(७९) डुङ्गा त केही निर्धनहरुको थियो, जुन नदीमा कार्य गर्दथे । मैले त्यसमा केही तोड-फोड गर्ने विचार गरें किनभने उनीहरुका अगाडी एउटा राजा थियो, जसलप्रत्येक राम्रो डुङ्गालाई जबरजस्ती खोसिहाल्थ्यो ।

وَأَمَّا الْغُلَٰمُ فَكَانَ أَبَوَاهُ مُؤْمِنَيْنِ فَخَشِينَا أَن يُرْهِقَهُمَا طُغْيَٰنًا وَكُفْرًا ﴿٨٠﴾

(८०) तथा त्यस नवयुवकका माता-पिता ईमान्दार थिए । हामीलाई यो डर भयो कि कहीं यसले उनीहरुलाई आफ्नो दुष्टता तथा अधर्मले विवश तथा हैरान नपारिदेओस् ।

فَأَرَدْنَا أَن يُبْدِلَهُمَا رَبُّهُمَا خَيْرًا مِّنْهُ زَكَوٰةً وَأَقْرَبَ رُحْمًا ﴿٨١﴾

(८१) यसकारण हामीले चाहयौं कि उनलाई उनको प्रभुले त्यसको साटो त्यसभन्दा उत्तम पवित्र तथा त्यसभन्दा अधिक प्रिय एवं प्रेमी बालक प्रदान गरोस् ।

وَأَمَّا الْجِدَارُ فَكَانَ لِغُلَٰمَيْنِ يَتِيمَيْنِ فِي الْمَدِينَةِ وَكَانَ تَحْتَهُ كَنزٌ لَّهُمَا وَكَانَ أَبُوهُمَا صَٰلِحًا فَأَرَادَ رَبُّكَ أَن يَبْلُغَا أَشُدَّهُمَا وَيَسْتَخْرِجَا كَنزَهُمَا رَحْمَةً مِّن رَّبِّكَ وَمَا فَعَلْتُهُ عَنْ أَمْرِي ذَٰلِكَ تَأْوِيلُ

(८२) तथा भित्ताको कथा यो हो कि त्यस नगरमा दुई अनाथ बालक छन्, जसका कोष उनीहरुको यस विचार(भित्ता) मुनि पुरिएका छन्, उनीहरुका पिता अत्याधिक पुनीत व्यक्ति थिए, त तिम्रो प्रभु चाहन्थ्यो कि यी दुबै अनाथ आफ्ना यौवनको आयुमा पुग्दा आफ्ना यो कोष तिम्रो प्रभुको कृपा तथा दयाले निकालून, मैले आफ्नो विचार

---

त्यसरी नै आदरणीय खिज़्रद्वारा घटित भएका घटनाहरुको सम्बन्ध पनि प्राकृतिक नियम अनुसार छ यसकारण यसलाई पनि धार्मिक नियमहरुको तराजूमा जोख्नु नै उचित छैन । परन्तु अब प्रकाशना तथा नबूअतको श्रृङ्खला समाप्त भइसके पश्चात कुनै व्यक्तिको यसप्रकारको दावी कदापि उचित तथा स्वीकार्य हुनेछैन जस्तो कि आदरणीय खिज़्रसँग सम्बन्धित छ किनभने आदरणीय खिज़्रको मामिला त कुरआनका आयतहरुबाट सिद्ध छ, यसकारण नकार्न सकिदैन, तर अब जो पनि यसप्रकारको दावी एवं कार्य गर्नेछ, त्यसलाई अस्वीकार गर्नु अनिवार्य तथा आवश्यक छ किनभने अब ती निश्चित ज्ञानका साधन होइनन् जसबाट त्यसका दावी तथा कार्यको वास्तविकता स्पष्ट हुनसकोस् ।

مَا لَمْ تَسْطِعْ عَّلَيْهِ صَبْرًا ۝

(तथा अधिकार) ले कुनै कार्य गरिन,[1] यो यथार्थता थियो ती घटनाहरुको जसमाथि तपाईंले धैर्य गर्नसक्नु भएन ।

وَيَسْـَٔلُونَكَ عَن ذِى الْقَرْنَيْنِ ط قُلْ

(८३) तथा तपाईंसित जुल्करनैनको घटनाको विषयमा यिनीहरु सोधिराखेका छन् ।[2] (तपाई) भनी

[1]आदरणीय खिज्रको नबूअतका पक्षधारीको यो दोस्रो तर्क हो जसबाट उनीहरु आदरणीय खिज्रको नबूअत (ऋषित्व) लाई सिद्ध गर्दछन्, किनभने कुनै गैर नबीको पासमा यसप्रकारको प्रकाशना आउँदैन । आदरणीय खिज्रको नबूअत जस्तै आदरणीय खिज्रको जीवन पनि एउटा क्षेत्रमा मतभेदको विषय छ तथा जो खिज्रलाई जीवित मान्दछन्, धेरै मानिसहरुको उनीसित भेट सिद्ध गर्दछन् तथा यसबाट उनी अहिलेसम्म जीवित हुने कुरोलाई प्रमाणित गर्दछन्, परन्तु जुन प्रकारले आदरणीय खिज्रको जीवनमाथि कुनै धार्मिक सूत्र लिखित रुपमा छैन, यसै विधिले मानिसहरुबाट अर्न्तज्ञान अथवा जागृत अवस्था अथवा निदाएको स्थितिमा आदरणीय खिज्रसित भेट्ने कुरोको दावी पनि स्वीकार्य छैन । जब उनको रुपरेखा नै प्रमाणित साधनहरुबाट प्राप्त छैन तब उनको पहिचान कसरी सम्भव छ ? तथा कसरी त्यसमाथि विश्वास गर्न सकिन्छ कि जुन महानुभावहरुले साक्षात्कारको दावी गरेका छन्, वास्तवमा उनीहरुको भेट मूसाको खिज्रसित भएको छ, खिज्रको नामबाट उनीहरुलाई कसैले धोका तथा छलमा लिप्त गरेन ।

[2]यो मूर्तिपूजकहरुको यो तेस्रो प्रश्नको उत्तर हो जुन यहूदीहरुको भनाईमा उनीहरुले नबी सल्लल्लाहु अलैहि वसल्लमसित गरेका थिए ذو القرنين (जुल्करनैन) को शाब्दिक अर्थ हो दुई सिङ्गवाला । यो नाम यसकारण पऱ्यो कि वास्तवमा त्यसको टाउकोमा दुईटा सिङ्ग थिए अथवा यसकारण कि उसले संसारको पूर्वी तथा पश्चिमी किनारमा पुगी सूर्यका किरणहरु अर्थात त्यसको प्रकाश रेखाको दर्शन गऱ्यो, केही विद्वानहरुको भनाइ छ कि त्यसको टाउकोमा दुईटा जटाहरु थिए, قرن (कर्ण) कपालका चुल्ठोलाई पनि भन्छन् अर्थात् दुईटा चुल्ठो भएको । प्राचीन व्याख्याकारहरुले बिना कुनै मतभेद यसको चरितार्थ सिकन्दर रुमीलाई भनेका छन् जसको विजयको क्षेत्र पूर्वदेखि पश्चिमसम्म फैलिएको थियो । परन्तु आधुनिक व्याख्याकारहरुले आधुनिक ऐतिहासिक ज्ञानको आधारमा यसबाट सहमत छैनन् । विशेषरुपले मौलाना अबुल कलाम आजादले यसमाथि जुन अनुसन्धान गर्नु भएको छ तथा त्यस व्यक्तिको खोजीमा जुन परिश्रम गर्नुभएको छ, त्यो अत्यन्त सम्माननीय छ । उहाँको सोधको सारांश यो हो कि त्यस जुल्करनैनको विषयमा कुर्आनले वर्णन गरेको छ कि त्यो यस्तो राजा थियो (१) जसलाई अल्लाहले साधन तथा माध्यम अधिक मात्रामा प्रदान गरेको थियो, (२) त्यो पूर्वी तथा पश्चिमी देशहरुलाई विजयी गर्दै एउटा यस्तो पर्वतीय उपत्यकामा पुग्यो जसको अर्को

سَاَتۡلُوۡا عَلَيۡكُمۡ مِّنۡهُ ذِكۡرًا ؃

दिनुस् कि म त्यसको केही बृत्तान्त तिमीलाई पढेर सुनाउन्छु ।

اِنَّا مَكَّنَّا لَهٗ فِى الۡاَرۡضِ وَاٰتَيۡنٰهُ مِنۡ كُلِّ شَىۡءٍ سَبَبًا ؄

(८४) हामीले धर्तीमा त्यसलाई शक्ति प्रदान गरेका थियौं तथा त्यसलाई प्रत्येक वस्तु[1] को साधन पनि प्रदान गरेका थियौं ।

فَاَتۡبَعَ سَبَبًا ؅

(८५) त्यो एउटा मार्गमा लाग्यो ।[2]

حَتّٰۤى اِذَا بَلَغَ مَغۡرِبَ الشَّمۡسِ وَجَدَهَا تَغۡرُبُ فِىۡ عَيۡنٍ حَمِئَةٍ وَّوَجَدَ

(८६) यहाँसम्मकि सूर्यास्तको ठाउँसम्म पुग्यो तथा त्यसलाई एउटा दलदलको स्रोतमा अस्ताइराखेका पायो तथा त्यस स्रोतको स्थानमा

---

तिर याजूज तथा माजूज थिए, (३) त्यसले त्यहाँ याजूज तथा माजूजलाई रोक्नको लागि एउटा अत्याधिक सुदृढ बाँध निर्मित गरायो (४) त्यो न्यायप्रिय थियो, (५) अल्लाहलाई मान्ने तथा आख़िरतमा ईमान राख्नेवाला थियो, (६) त्यो अहङकारी तथा धनको लोभी थिएन । स्वर्गीय मौलाना भन्नुहुन्छ कि यी विशेषताहरुले परिपूर्ण फारसको त्यो महाराजा हो जसलाई यूनानी साईरस, हिब्रु भाषामा ख़ोरिस तथा अरबमा खुसरुको नामले पुकार्दछन् । त्यसको राज्यकाल ५३९ इश्वी पूर्व हो । यसका अतिरिक्त भन्नुहुन्छ कि १८३७ इश्वीमा साईरसको एउटा मूर्ति निस्केको थियो जसमा साईरसको शरीरलाई यसप्रकार देखाइएको थियो कि उसका दुबैतिर बाज़ चराको जस्तै पखेटा निस्केका छन् तथा टाउकोमा भेंडाको जस्तो सिङ्ग छन् (विस्तृत जानकारीको लागि हेर्नुस् तफ़सीर तर्जुमानुल कुर्आन, भाग-१, पृष्ठ ३९९ देखि ४३० सम्म पुरानो संस्करण)

[1] سبب सबबको मूल अर्थ डोरी हो, यसको प्रयोग यस्तो साधन तथा माध्यमको लागि हुन्छ जुन लक्ष्य प्राप्तिको लागि गरिन्छ, यस आधारमा سببا (सबबा) को अर्थ हो कि हामीले त्यसलाई यस्ता साधन तथा माध्यम उपलब्ध गर्‍यौं, जसबाट काम लिएर उसले विजय प्राप्त गर्‍यो, शत्रुहरुको गर्व निर्मूल पार्‍यो, अत्याचारी प्रशासकको नाश गर्‍यो ।

[2] दोस्रो سبب को अर्थ मार्गसित लिएको छ अथवा यो अर्थ हो कि अल्लाहद्वारा दिइएका साधनहरुबाट अन्य साधन तयार गर्‍यो, जसरी अल्लाहबाट उपलब्ध गराइएको फलामबाट विभिन्न प्रकारका हतियार तथा यसैप्रकारका अन्य मूल द्रव्यबाट धेरैजसो कुरा तयार गरिन्छ ।

[3] عين (अयन्) सित तात्पर्य स्रोत अथवा समुद्र हो । حمئة हिलो, दलदल, وجد (वज़दा) (फेला पार्‍यो) अर्थात देख्यो अथवा आभास गर्‍यो । अर्थ यो हो कि जुल्क़रनैन जब पश्चिमी दिशातिर एउटा देशपछि अर्को देश विजयी गर्दै त्यस स्थानमा पुगे, जहाँ अन्तिम आबादी थियो त्यहाँ फोहोर पानीको

عِنْدَهَا قَوْمًا ۗ قُلْنَا يٰذَا الْقَرْنَيْنِ اِمَّآ اَنْ تُعَذِّبَ وَاِمَّآ اَنْ تَتَّخِذَ فِيْهِمْ حُسْنًا ﴿٨٦﴾

एउटा समुदाय पनि फेला पान्यो हामीले भन्यौं[1] हे जुल्कैरनैन ! तिमी उनीहरुलाई दुख पुऱ्याउ तथा उनको विषयमा उचित मार्ग निकाल ।[2]

قَالَ اَمَّا مَنْ ظَلَمَ فَسَوْفَ نُعَذِّبُهٗ ثُمَّ يُرَدُّ اِلٰى رَبِّهٖ فَيُعَذِّبُهٗ عَذَابًا نُّكْرًا ﴿٨٧﴾

(८७) उसले भन्यो कि जसले अत्याचार गर्नेछ त्यसलाई त हामी पनि दण्ड दिनेछौं ।[3] त्यसपछि त्यो आफ्नो प्रभुतिर फर्काइनेछ तथा उसले त्यसलाई कठोर यातना दिनेछ ।

وَاَمَّا مَنْ اٰمَنَ وَعَمِلَ صَالِحًا فَلَهٗ جَزَآءَ ۨالْحُسْنٰى ۚ وَسَنَقُوْلُ لَهٗ مِنْ اَمْرِنَا يُسْرًا ﴿٨٨﴾

(८८) किन्तु जसले ईमान ल्यायो तथा सत्कर्म गन्यो त्यसको लागि त राम्रो प्रतिफल छ तथा हामीले त्यसलाई आफ्नो कार्यमा पनि सरलताको आदेश दिनेछौं ।

ثُمَّ اَتْبَعَ سَبَبًا ﴿٨٩﴾

(८९) अनि त्यो अन्य मार्गमा[4] तिर लाग्यो ।

حَتّٰىٓ اِذَا بَلَغَ مَطْلِعَ الشَّمْسِ وَجَدَهَا تَطْلُعُ عَلٰى قَوْمٍ لَّمْ نَجْعَلْ

(९०) यहाँसम्मकि जब सूर्योदयको स्थानमा पुग्यो त त्यसलाई एउटा यस्तो समुदायमाथि उदय भइराखेको

स्रोत अथवा समुद्र थियो जुन तलबाट कालो देखिन्थ्यो, त्यसलाई यस्तो प्रतीत भयो कि मानौं सूर्य स्रोतमा अस्ताइराखेको छ । समुद्रको किनारबाट अथवा टाढाबाट जसको अगाडीको सीमासम्म केही नहोस्, सूर्यास्तको दृश्य हेर्नेहरुलाई यस्तै प्रतीत हुन्छ कि सूर्य समुद्रमा अथवा धर्तीमा अस्ताइराखेको छ, यद्यपि त्यो आफ्नो स्थानमै आकाशमा रहन्छ ।

[1] قلنا (कुल्ना) (हामीले भन्यौं) प्रकाशनाद्वारा, यसैकारण केही धर्मगुरुहरुले यसैबाट उनको नवूअतको तर्क दिएका छन् । तथा जुन उनको नबूअत (ऋषित्व) को पक्षमा छैनन्, भन्दछन् कि त्यस समयको पैग़म्बरको माध्यमबाट हामीले उसित भन्यौं ।

[2]अर्थात् हामीले त्यस समुदायलाई प्रभुत्व दिएर अधिकार दियौं कि चाहे उसलाई वध गरोस् तथा बन्दी बनाओस् अथवा कर लिएर उपकार स्वरुप छाडिदेओस् ।

[3]अर्थात् जो कुफ्र तथा मूर्तिपूजामा अडिग रहनेछ, त्यसलाई हामीले दण्ड दिनेछौं अर्थात विगतका त्रुटिहरुमा पकड हुनेछैन ।

[4]अर्थात् अब पश्चिमदेखि पूर्वतिर यात्रा प्रारम्भ गन्यो ।

لَهُمْ مِّنْ دُوْنِهَا سِتْرًا ۙ﴿٩٠﴾

पायो कि उनका लागि हामीले त्यसबाट अन्य कुनै रक्षात्मक पर्दा बनाएनौं ।[1]

كَذٰلِكَ ۗ وَقَدْ اَحَطْنَا بِمَا لَدَيْهِ خُبْرًا ﴿٩١﴾

(९१) घटना यस्तै नै छ । हामीले त्यसका आसपासका सम्पूर्ण समाचारलाई घेरेका छौं ।[2]

ثُمَّ اَتْبَعَ سَبَبًا ﴿٩٢﴾

(९२) त्यो पछि एउटा अन्य मार्गातिर लाग्यो ।[3]

حَتّٰٓى اِذَا بَلَغَ بَيْنَ السَّدَّيْنِ وَجَدَ مِنْ دُوْنِهِمَا قَوْمًا ۙ لَّا يَكَادُوْنَ يَفْقَهُوْنَ قَوْلًا ﴿٩٣﴾

(९३) यहाँसम्मकि जब दुबै पर्खालहरुको मध्ये[4] पुग्यो तब दुबैका त्यसतिर यस्तो समुदाय फेला पऱ्यो जो कुरा बुझ्नुको निकट पनि थिएन ।[5]

قَالُوْا يٰذَا الْقَرْنَيْنِ اِنَّ يَاْجُوْجَ وَمَاْجُوْجَ

(९४) (उनीहरुले) भने हे जुल्क़रनैन ![6] याजूज़

[1]अर्थात् यस्तो स्थानमा पुग्यो जुन पूर्व दिशाको अन्तिम आवादी थियो, जहाँ उसले यस्तो समुदाय देख्यो जुन मकानहरुमा निवास गर्नुको सट्टा मैदान तथा मरुस्थलहरुमा निवास गर्दै, निर्वस्त्र थियो । यो अर्थ हो उनका तथा सूर्यका बीच पर्दा थिएन । सूर्य उनका नाङ्गा शरीरमा उदय हुन्थ्यो ।

[2]अर्थात् जुल्क़रनैनको विषयमा हामीले जे वर्णन गरेका छौं, त्यो यसैप्रकार छ कि पहिला त्यो पश्चिमको अन्तिम सीमासम्म पछि पूर्वको अन्तिम सीमासम्म पुग्यो तथा हामीलाई त्यसका सबै संसाधन एवं अन्य कुराहरुको पूरा ज्ञान छ ।

[3]अर्थात् अब त्यसको ध्यान कुनै अन्यतिर फर्क्यो ।

[4]यसबाट तात्पर्य दुई पर्वत हुन् जुन एक-अर्काका सम्मुख थिए, उनका मध्येमा घाटी (उपत्यका) थियो, जसबाट याजूज़ तथा माजूज यता वस्तीमा आउने गर्दथे तथा उपद्रव मच्चाउँथे तथा नरसंहार गर्थे ।

[5]अर्थात् आफ्नो भाषाको अतिरिक्त कुनै अन्यको भाषा बुझ्दैनथे ।

[6]जुल्क़रनैनसित यो सम्बोधन या त कुनै अनुवादकद्वारा भएको होला अथवा अल्लाह तआलाले जुल्क़रनैनलाई जुन विशेष माध्यम तथा साधन प्राप्त गराएका थिए । तिनैमा विभिन्न भाषाहरुको ज्ञान पनि हुनसक्छ तथा यसप्रकार यो सम्बोधन सोझो पनि हुनसक्छ ।

مُفْسِدُونَ فِي الْأَرْضِ فَهَلْ نَجْعَلُ لَكَ خَرْجًا عَلَىٰ أَن تَجْعَلَ بَيْنَنَا وَبَيْنَهُمْ سَدًّا ﴿٩٤﴾

तथा माजूज यस देशमा निकै उपद्रवी छन् ।[1] त के हामीले तपाईंका लागि केही धन एकत्रित गरिदेऔं ? (यस शर्तमा कि) तपाईं हाम्रो तथा उनका बीच कुनै दिवार (पर्खाल) बनाइदिनुस् ।

قَالَ مَا مَكَّنِّي فِيهِ رَبِّي خَيْرٌ فَأَعِينُونِي بِقُوَّةٍ أَجْعَلْ بَيْنَكُمْ وَبَيْنَهُمْ رَدْمًا ﴿٩٥﴾

(९५) उसले उत्तर दियो कि मेरो वशमा मेरो प्रभुले जे प्रदान गरेको छ त्यही उत्तम छ, तिमी केवल आफ्नो शक्ति तथा बलले मेरो सहायता गर, तिम्रो र उनका मध्येमा सुदृढ पर्खाल बनाइदिन्छु ।[2]

آتُونِي زُبَرَ الْحَدِيدِ ۖ حَتَّىٰ إِذَا سَاوَىٰ بَيْنَ الصَّدَفَيْنِ قَالَ انفُخُوا ۖ حَتَّىٰ إِذَا جَعَلَهُ نَارًا قَالَ آتُونِي أُفْرِغْ عَلَيْهِ قِطْرًا ﴿٩٦﴾

(९६) मलाई फलामका च्यादरहरु ल्याइदेउ । यहाँसम्मकि जब ती दुई पर्वतहरुका मध्ये पर्खाल तयार गरिदियो[3] त आदेश दियो कि फूँक (अर्थात् तीव्र आगो बाल) त्यस समयसम्म जबकि फलामका यी चादरहरुलाई बिल्कुलै आगो बनाइदियो, तब भन्यो मेरो पासमा ल्याउ यसमाथि पग्लेको तामा हालिदेउ ।[4]

---

[1]याजूज तथा माजूज दुई सम्प्रदाय हुन् तथा सहीह हदीसको आधारमा मानव जातिबाटै हुन् तथा उनीहरुको संख्या अन्य मानव जातिको सापेक्ष अधिक हुनेछ तथा उनीहरुबाट नरक अधिक भरिनेछ । (सहीह बुख़ारी तफ़सीर सूरः अल हज्जवल रिक़ाक़ बाबु इन्न ज़लज़लतस्साअते शैउन अज़ीम, तथा सहीह मुस्लिम किताबुल ईमान बाब कौलिहि यकूलुल्लाहू–आदम, अख़रिज बअसलनार)

[2]शक्तिसित तात्पर्य अर्थात तिमी मलाई निर्माण सामग्री तथा कर्मयोगी उपलब्ध गराउ।

[3]بين الصدفين (बैनस्सदफैन) अर्थात् दुबै पर्वतहरुका किनारहरुको मध्ये जुन खुला थियो, त्यसलाई फलामका स-साना चादरहरुले भरिदियो ।

[4]قطر (कित्रन्) पग्लेको सिसा अथवा फलाम अथवा तामा । अर्थात फलामका चादरहरुलाई निकै तताएर त्यसमाथि पग्लेको फलाम, तामा अथवा सिसा हाल्नाले त्यो पहाडी घाटी अथवा मार्ग यति बलियो भइहाल्यो कि त्यसलाई पार गरेर अथवा तोडेर याजूज तथा माजूज़को यता अरु मानिसहरुको वस्तीमा आगमन असम्भव भइहाल्यो ।

(९७) त्यस पश्चात न त तिनीहरुमा त्यस पर्खालमाथि चढ्ने शक्ति थियो तथा न त्यसमा कुनै प्वाल पार्न सक्दथे ।

فَمَا اسْطَاعُوا أَنْ يَظْهَرُوهُ وَمَا اسْتَطَاعُوا لَهُ نَقْبًا ۝٩٧

(९८) भन्यो कि यो केवल मेरो प्रभुको कृपा हो, परन्तु जब मेरो प्रभुको वादा (वचन) आउनेछ, त त्यसलाई धराशायी गरिदिनेछ ।[1] निःसन्देह मेरो प्रभुको वचन सत्य छ ।

قَالَ هَٰذَا رَحْمَةٌ مِّن رَّبِّي ۖ فَإِذَا جَاءَ وَعْدُ رَبِّي جَعَلَهُ دَكَّاءَ ۖ وَكَانَ وَعْدُ رَبِّي حَقًّا ۝٩٨

[1]अर्थात् यो पर्खाल यद्यपि बडो दृढ बनाइयो जसमाथि चढेर अथवा त्यसमा छिद्र पारेर याजूज़ तथा माजूज़को यसतिर आगमन सम्भव छैन, परन्तु जव मेरो प्रभुको वादा (वचन) आउनेछ, त उसले त्यसलाई कण-कण पारी धर्ती जस्तै पारिदिन्छ । यस वचनबाट तात्पर्य केयामतका निकट याजूज़ तथा माजूज़को प्रकट हुनु हो, जस्तो कि हदीसहरुमा छ । जस्तै एउटा हदीसमा छ नबी सल्लल्लाहु अलैहि वसल्लमले त्यस पर्खालमा अलिकति छिद्र हुने कुरोलाई उपद्रवको निकट हुने समान भन्नुभएको छ (सहीह बुख़ारी संख्या ३३४६, तथा सहीह मुस्लिम संख्या २२०८) । एउटा अन्य हदीसमा चर्चित छ कि उनीहरु प्रत्येक दिन त्यस पर्खाललाइ खन्छन् तथा फेरि भोलिको लागि छोडिदिन्छन्, परन्तु जब अल्लाहको इच्छा उनको निकट हुनेछ त उनीहरु भन्नेछन् कि भोलि إن شاء الله (इन्शाल्लाह) त्यसलाई खन्नेछौं तथा फेरि दोस्रो दिन उनीहरु त्यसबाट निस्कनमा सफल हुनेछन् । धर्तीमा उपद्रव मच्चाउनेछन् यहाँसम्मकि मानिसहरु घरमा थुनिन्छन्, यिनीहरु आकाशतिर वाँड हान्नेछन् जुन रक्त रंजित भई फर्कने छन् । अन्तमा अल्लाह तआला उनीहरुका गिदीमा यस्ता किरा पैदा गरिदिनेछ जुन उनका विनाशका कारण बन्नेछन् । (मुसनद अहमद १२/५११ जामेअ तिर्मिजी संख्या ३१५३, वल अहादीसुस्सहीहः लिल अलबानी संख्या १७३५) सहीह मुस्लिम नव्वास बिन समआनको कथनबाट स्पष्ट छ कि याजूज तथा माजूज़को प्रकटन आदरणीय ईसा अवतरित भए पश्चात उनको उपस्थितिमा हुनेछ । (किताबुल फ़ेतन व अशरातुस्साअते, बाबु ज़िक्‌रिद दज्जाल) जसबाट उनीहरुको खण्डन हुन्छ जो भन्दछन् कि तातारिहरुको मुसलानहरुमाथि आक्रमण अथवा मंगोल तुर्क जसमा चंगेज खाँ पनि थियो अथवा रुसी अथवा चाइनिज जातिहरु यही याजूज तथा माजूज़ हुन्, जसको प्रकटन भइसक्यो । अथवा पाश्चात्य जातिहरु उनका अनुरुप छन् कि सम्पूर्ण संसारमा उनको प्रभाव छ । यी सबै कुरा गलत हुन् किनभने उनको प्रभावबाट राजनैतिक प्रभाव तात्पर्य होइन, बरु रक्तपात, उपद्रव, आतङ्कको त्यो अस्थाई प्रभाव हो जसको सामना गर्ने शक्ति मुसलमानहरुमा हुनेछैन, तैपनि ईश्वरीय आपदाका कारण सबै एकैछिनमा कालको मुखमा गइहाल्ने छन् ।

وَتَرَكْنَا بَعْضَهُمْ يَوْمَئِذٍ يَمُوجُ فِي بَعْضٍ وَنُفِخَ فِي الصُّورِ فَجَمَعْنَاهُمْ جَمْعًا ﴿٩٩﴾

(९९) तथा त्यस दिन हामीले उनीहरुलाई एक-अर्कासित समुद्रको छालहरुजस्तै गुजुल्टिंदै (नजिक भएको अवस्थामा छाडिदिनेछौ) तथा नरसिंघा फुकिनेछ, अनि सबैलाई एक साथ हामी एकत्रित गर्नेछौं।

وَعَرَضْنَا جَهَنَّمَ يَوْمَئِذٍ لِّلْكَافِرِينَ عَرْضًا ﴿١٠٠﴾

(१००) तथा त्यस दिन हामी नरकलाई (पनि) काफिरहरुका समक्ष ल्याइ उभ्याउनेछौं।

الَّذِينَ كَانَتْ أَعْيُنُهُمْ فِي غِطَاءٍ عَن ذِكْرِي وَكَانُوا لَا يَسْتَطِيعُونَ سَمْعًا ﴿١٠١﴾

(१०१) जसका नेत्रहरु मेरो स्मरणबाट पर्दामा थिए तथा (सत्य कुरा) सुन्न पनि सक्दैनथे।

أَفَحَسِبَ الَّذِينَ كَفَرُوا أَن يَتَّخِذُوا عِبَادِي مِن دُونِي أَوْلِيَاءَ ۚ إِنَّا أَعْتَدْنَا جَهَنَّمَ لِلْكَافِرِينَ نُزُلًا ﴿١٠٢﴾

(१०२) यी काफिरहरु यो भन्ठान्नेछन् कि मेरो अतिरिक्त उनीहरु मेरा दासहरुलाई आफ्ना पक्षधर बनाइहाल्नेछन् ? (सुन) हामीले त अधर्मीहरुको अतिथि सत्कारको लागि नरकलाई तयार गरेका छौं।[1]

قُلْ هَلْ نُنَبِّئُكُم بِالْأَخْسَرِينَ أَعْمَالًا ﴿١٠٣﴾

(१०३) भनिदिनुस् कि यदि (तिमी भन्छौ भने) म तिमीलाई बताइदिन्छु कि आफ्ना कर्महरुको कारण सबैभन्दा अधिक हानिमा को छ ?

[1] حسب (हसब) को अर्थ ظن (जन) को अर्थमा छ तथा عبادي (इबादी) (मेरा भक्त) बाट तात्पर्य फरिश्ताहरु, मसीह अलैहिस्सलाम तथा अन्य महात्मा हुन्, जसलाई कार्यक्षम तथा कष्ट निवारक ठानिन्छ, त्यसैप्रकार शैतान तथा जिन्नात हुन्, जसको पूजा अर्चना गरिन्छ। तथा प्रश्न धम्की तथा झपारको लागि हो। अर्थात् अल्लाहको अतिरिक्त अरुहरुका पूजारी के यो ठान्दछन् कि उनीहरु मलाई छाडेर मेरा भक्तहरुको पूजा गरी उनका पक्षबाट मेरो यातनाबाट बाँच्नेछन् ? यो असम्भव छ हामीले ती काफिरहरुका लागि नरक तयार गरेका छौं, जसमा जानबाट ती भक्त रोक्न सक्ने छैनन् जसको यिनीहरु पूजा गर्दछन् तथा उनलाई आफ्नो पक्षधर ठान्दछन्।

أَلَّذِينَ ضَلَّ سَعْيُهُمْ فِي الْحَيَوٰةِ الدُّنْيَا وَهُمْ يَحْسَبُونَ أَنَّهُمْ يُحْسِنُونَ صُنْعًا ﴿١٠٤﴾

(१०४) तिनीहरु जसका सांसारिक जीवनका सबै प्रयत्न व्यर्थ भयो तथा उनीहरु यसै भ्रममा रहन्छन् कि उनीहरु धेरै राम्रा कार्य गरिराखेका छन् ।[1]

أُولَٰئِكَ الَّذِينَ كَفَرُوا بِآيَاتِ رَبِّهِمْ وَلِقَائِهِ فَحَبِطَتْ أَعْمَالُهُمْ فَلَا نُقِيمُ لَهُمْ يَوْمَ الْقِيَامَةِ وَزْنًا ﴿١٠٥﴾

(१०५) यी नै ती मानिसहरु हुन्, जसले आफ्नो प्रभुका आयतहरुबाट तथा त्ससँग साक्षात्काबाट इन्कार गरे ।[2] अतः उनका सारा कर्म व्यर्थ भए, अनि केयामतका दिन उनका कुनै भार निर्धारित गर्ने छैनौं ।[3]

ذَٰلِكَ جَزَاؤُهُمْ جَهَنَّمُ بِمَا كَفَرُوا وَاتَّخَذُوا آيَاتِي وَرُسُلِي هُزُوًا ﴿١٠٦﴾

(१०६) वास्तविकता यो हो कि उनको प्रतिफल नरक् हो, किनभने उनले कुफ्र गरे तथा मेरा आयत तथा मेरा रसूलहरुको उपहास गरे ।

[1]अर्थात् उनका कर्म यस्ता छन् जुन अल्लाहका सदनमा अप्रिय छन्, तर आफ्ना विचारको कारण ठान्दछन् कि यिनीहरु निकै राम्रा काम गरिराखेका छन् । यसबाट तात्पर्य को हुन् ? केही विद्वानहरु भन्दछन् कि यहूदी तथा इसाई हुन्, केही भन्छन् अधर्मी तथा अन्य मानिसहरु जसले धर्ममा मिश्रण गरेका छन्, केही भन्छन् मूर्तिपूजक हुन् । साँचो कुरा यो हो कि आयत साधारण छ जसमा प्रत्येक त्यो व्यक्ति तथा गुट सम्मिलित छ जसमा उपरोक्त दोष पाइनेछ । अगाडी यस्तै मानिसहरुको विषयमा केही अन्य चेतावनीहरुको वर्णन छ ।

[2]प्रभुका निशानीहरुबाट तात्पर्य एकेश्वरवादको ती तर्क हुन् जुन समस्त जगत्मा फैलिएका छन् तथा ती धार्मिक निशानीहरु हुन् जुन उसले आफ्ना किताबहरुमा अवतरित गऱ्यो तथा पैगम्बरहरुले त्यसका प्रचार-प्रसार गरे । तथा प्रभुको साक्षात्कारबाट इन्कारको अर्थ आखिरतको जीवन तथा पुनः जीवित हुने कुरोलाई अस्वीकार गर्नु हो ।

[3]अर्थात् हामीकहाँ यिनको कुनै महत्व हुनेछैन अथवा यो अर्थ हो कि हामी उनका लागि तराजूको प्रबन्ध गर्ने छैनौं कि जसमा उनका कर्म जोखिने छन्, यसकारण कि कर्म त ती एकेश्वरवादीहरुका जोखिनेछन् जसका कर्मपत्रमा पाप तथा पुण्य दुबै हुनेछन्, जबकि यिनका कर्मपत्र पुण्यका कामहरुबाट शून्य हुनेछन् । जस्तो हदीसमा वर्णित छ,"क्यामतका दिन हृष्ट-पुष्ट व्यक्ति आउनेछ, अल्लाहका सदनमा उसको यति पनि भार हुनेछैन जति लामखुट्टेको पखेटाको हुन्छ, त्यसपछि उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) ले यसै आयतको पाठ गर्नुभयो ।" (सहीह बुख़ारी तफ़सीर सूरः अल-कहफ़)

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ كَانَتْ لَهُمْ جَنَّاتُ الْفِرْدَوْسِ نُزُلًا ﴿١٠٧﴾

(१०७) जुन मानिसहरुले ईमान ल्याए तथा उनीहरुले राम्रो काम पनि गरे, निःसन्देह उनको लागि फ़िरदौस (स्वर्गको सर्वोच्च स्थान)[1] का बगैंचाहरुमा स्वागत छ ।

خَالِدِينَ فِيهَا لَا يَبْغُونَ عَنْهَا حِوَلًا ﴿١٠٨﴾

(१०८) जहाँ उनी सधैं रहनेछन्, जुन ठाउँलाई बदल्न कहिले पनि उनको विचार नै हुनेछैन ।[2]

قُلْ لَوْ كَانَ الْبَحْرُ مِدَادًا لِكَلِمَاتِ رَبِّي لَنَفِدَ الْبَحْرُ قَبْلَ أَنْ تَنْفَدَ كَلِمَاتُ رَبِّي وَلَوْ جِئْنَا بِمِثْلِهِ مَدَدًا ﴿١٠٩﴾

(१०९) भनिदिनुस् कि यदि मेरा प्रभुका कुराहरुलाई लेख्न[3] को निम्ति समुद्र मसी बनिदेओस् । त त्यो पनि मेरा प्रभुका कुराहरु समाप्त हुनुभन्दा पूर्व नै समाप्त भइहाल्नेछ, चाहे हामी त्यसै जस्तो अन्य पनि त्यसको सहायताको लागि लिएर आऔं ।

قُلْ إِنَّمَا أَنَا بَشَرٌ مِثْلُكُمْ يُوحَىٰ إِلَيَّ أَنَّمَا إِلَٰهُكُمْ إِلَٰهٌ وَاحِدٌ ۖ فَمَنْ كَانَ

(११०) तपाईं भनिदिनुस् कि म त तिमीजस्तै एउटा मानव पुरुष हूँ ।[4] (हो) मतिर प्रकाशना (वह्‌यी) गरिन्छ कि सबैका

---

[1] جنت الفـــردوس (जन्नतुल फिरदौस) स्वर्गको सर्वोच्च श्रेणी हो । यसकारण नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि, जतिखेर पनि तिमी अल्लाहसित स्वर्गको प्रश्न गर्छौ त अल-फिरदौस (सर्वोच्च) को प्रश्न गर, किनभने त्यो स्वर्गको सर्वोच्च भाग हो तथा त्यहींबाट स्वर्गका नदीहरुको उद्‌गम छ । (सहीह बुख़ारी किताबुत तौहीद बाबु व कान अर्शुहू अलल माए)

[2] अर्थात् स्वर्गका निवासीहरुलाई स्वर्ग तथा त्यसका सुख-सुविधाहरुबाट कहिले पनि वाक्क लाग्ने छैन कि उनी यसका अतिरिक्त कुनै अन्य स्थानमा स्थान्तरित हुने कुरोको इच्छा व्यक्त गरून् ।

[3] كلمات (कलेमात) बाट तात्पर्य अल्लाह तआलाको आच्छादित ज्ञान तथा त्यसका गुण एवं तर्क युक्तिहरु हुन्, जुन त्यसको एक हुने कुरोका प्रमाण हुन् । मानौं बुद्धि ती सबैलाई घेर्न सक्दैन तथा संसारभरिका वृक्षहरुबाट कलम बनिहालून् तथा सारा समुद्र बरु उनको जस्तै अन्य समुद्र पनि भए, त्यो सबै मसीमा परिणत भईहालून् । कलम खिएर जानेछन् । सिआही (मसी) समाप्त हुनेछ, परन्तु प्रभुका वाक्य तथा गुणलाई लेख्न सकिंदैन ।

[4] यसकारण म पनि प्रभुका कुराहरुको घेरा गर्न सक्दिन ।

يَرْجُوا لِقَاءَ رَبِّهِ فَلْيَعْمَلْ عَمَلًا صَالِحًا وَلَا يُشْرِكْ بِعِبَادَةِ رَبِّهِ أَحَدًا ﴿١١٠﴾

पूज्य मात्र एउटै पूज्य छ।[1] तसर्थ जसलाई पनि आफ्नो प्रभुसित साक्षातकारको कामना छ, त्यसलाई आवश्यक छ कि पुण्यका कार्य गरोस् तथा आफ्नो प्रभुको आराधना (इबादत) मा[2] कसैलाई पनि सम्मिलित नगरोस् ।

## سُورَةُ مَرْيَمَ

## सूरतु मरियम-१९

सूरः मरियम* मक्कामा उत्रेको तथा यसमा ९८ आयत तथा ६ रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु तथा अत्यन्त दयालु छ ।

كهيعص ﴿١﴾

(१) काफ.हा.या.ऐन.साद

---

[1]परन्तु मलाई यो श्रेष्ठता प्राप्त छ कि ममाथि अल्लाहको प्रकाशना अवतरित हुन्छ । त्यसै प्रकाशनाका कारण मैले कहफ़वालाहरु तथा जुल्करनैनको सम्बन्धमा अल्लाहको तर्फबाट अवतरित कुराहरु वर्णन गरेको छु, जसमाथि युगको वाक्लो पत्र परेको थियो अथवा तिनका वास्तविकता कल्पित कथाहरुमा हराइसकेको थियो । यसका अतिरिक्त यस प्रकाशनामा यो महत्वपूर्ण आदेश दिइएको छ कि तिमी सबैको आराध्य एउटा छ ।

[2]सत्कर्म त्यो हो जुन सुन्नतका अनुसार हुन्छ अर्थात जो आफ्नो प्रभुसित साक्षात्कारको विश्वास राख्दछ त्यसलाई आवश्यक छ कि प्रत्येक कर्म नबी सल्लल्लाहु अलैहि वसल्लमका चरित्र अनुसार गरोस् । तथा अर्को यो कि अल्लाहको उपासना (इबादत) मा कुनै अन्यलाई साझेदार नठहराओस्, यसकारण कि धर्ममा नयाँ कुराहरु मिसाउनु तथा मूर्तिपूजा दुबै कर्महरुको व्यर्थ हुने कुराका कारण हुन् । अल्लाह तआलाले यी दुबैबाट प्रत्येक मुसलमानलाई सुरक्षित राखोस् ।

*हब्शाको हिज़रतको कथामा भनिएको छ कि इथोपिया (हब्शा) को राजा नज़ाशी तथा त्यसका सदस्य एवं मन्त्रीगणका समक्ष जब सूरः मरियमको प्रारम्भिक भाग आदरणीय ज़ाफर बिन अबी तालिबले सुनाए त त्यसलाई सुनेर ती सबैका दाह्री आँसुले भिजे तथा नज़ाशीले भन्यो कि यो कुरआन तथा आदरणीय ईसाले जे ल्याए, सबै एउटै ज्योतिका किरणहरु हुन् । (फ़तहुल क़दीर)

ذِكْرُ رَحْمَتِ رَبِّكَ عَبْدَهُۥ زَكَرِيَّآ ۝٢

(२) यो हो तिम्रो प्रभुको त्यस कृपाको वर्णन, जुन उसले आफ्नो भक्त ज़करियामाथि गरेको थियो ।

إِذْ نَادَىٰ رَبَّهُۥ نِدَآءً خَفِيًّا ۝٣

(३) जबकि उसले आफ्नो प्रभुसित गुप्तरुपले प्रार्थना गरेको थियो ।

قَالَ رَبِّ إِنِّى وَهَنَ ٱلْعَظْمُ مِنِّى وَٱشْتَعَلَ ٱلرَّأْسُ شَيْبًا وَلَمْ أَكُنۢ بِدُعَآئِكَ رَبِّ شَقِيًّا ۝٤

(४) भन्यो कि हे मेरा प्रभु ! मेरा हाडहरु निर्बल भइसकेका छन् तथा बुढ्यौलीका कारण टल्किने सेतो भइसकेको छ ।[३] तर म कहिल्यै पनि तिमीसित प्रार्थना गरेर बञ्चित रहिन ।[४]

وَإِنِّى خِفْتُ ٱلْمَوَٰلِىَ مِن وَرَآءِى وَكَانَتِ ٱمْرَأَتِى عَاقِرًا فَهَبْ لِى مِن لَّدُنكَ وَلِيًّا ۝٥

(५) तथा मलाई (आफू मर्नु) पश्चात आफ्ना निकट सम्बन्धिहरुको भय छ,[५] मेरी पत्नी पनि बाँझो छे, तर तिमी मलाई आफ्नो तर्फबाट[६] उत्तराधिकारी प्रदान गर ।

---

[१]आदरणीय ज़करिया इस्राईलका वंश मध्येबाट नबी हुन् । यिनी डकर्मी थिए तथा यही व्यवसाय उनको आयको साधन थियो । (सहीह मुस्लिम बाबु मिन फज़ाएले ज़करिया)

[२]गुप्तरुपले प्रार्थनाहरु यसकारण गरे कि एक त उनी अल्लाहलाई अधिक प्रिय छन् किनभने यसमा विन्ती, ध्यान, विनय तथा नम्रता अधिक हुन्छ । दोस्रो यसकारण कि भ्रष्ट बुद्धिवाला नभनौं कि यो बुढो अब बृद्धा अवस्थामा सन्तान माँगिराखेको छ, जबकि सन्तानका सबै प्रत्यक्ष सम्भावनाहरु समाप्त भइसकेका छन् ।

[३]यसबाट तात्पर्य निर्वलता तथा बृद्धावस्थाको प्रदर्शन हो ।

[४]तथा यसकारण प्रत्यक्ष साधनको अभाव हुँदाहुँदै तिमीसित सन्तान माँगिराखेको छु ।

[५]यस भयबाट तात्पर्य यो हो कि यदि मेरो कोही उत्तराधिकारी मेरो शिक्षा-दीक्षाको पद सम्हाल्ने छैन भने मेरा सम्बन्धिहरुमा त कोही यस पदको योग्य छैन । परिणाम स्वरुप मेरा सम्बन्ध पनि तिम्रो मार्गबाट विमुख नहोऊन् ।

[६]"आफ्नो तर्फबाट" को अर्थ यही हो कि यदि प्रत्यक्ष साधन यसका समाप्त भइसकेका छन्, परन्तु आफ्नो विशेष कृपाले मलाई सन्तान प्रदान गर ।

يَّرِثُنِىۡ وَيَرِثُ مِنۡ اٰلِ يَعۡقُوۡبَۖ وَاجۡعَلۡهُ رَبِّ رَضِيًّا‏ ﴿٦﴾

(६) जो मेरो पनि उत्तराधिकारी होस् र याकूबको वंशको पनि उत्तराधिकारी होस् तथा हे मेरा प्रभु ! यिनी त्यसलाई स्वीकृत भक्त बनाउ ।

يٰزَكَرِيَّاۤ اِنَّا نُبَشِّرُكَ بِغُلٰمِ ۨاسۡمُهٗ يَحۡيٰى ۙ لَمۡ نَجۡعَلْ لَّهٗ مِنۡ قَبۡلُ سَمِيًّا‏ ﴿٧﴾

(७) (जवाफ प्राप्त भयो) : "हे ज़करीया ! हामी तिमीलाई एउटा बालकको शुभ-सूचना दिन्छौं, जसको नाम यहया हुनेछ, हामीले त्यसभन्दा पहिला यसको सनाम पनि कसैलाई गरेनौं ।[1]

قَالَ رَبِّ اَنّٰى يَكُوۡنُ لِىۡ غُلٰمٌ وَّكَانَتِ امۡرَاَتِىۡ عَاقِرًا وَّقَدۡ بَلَغۡتُ مِنَ الۡكِبَرِ عِتِيًّا‏ ﴿٨﴾

(८) (ज़करिया) ले भने, हे मेरा प्रभु ! म कहाँ बालक कसरी हुनेछ, मेरी पत्नी बाँझो तथा म स्वयं बुढेसको अति निर्बल अवस्थामा पुगिसकेको छु ।[2]

قَالَ كَذٰلِكَ ۚ قَالَ رَبُّكَ هُوَ عَلَىَّ هَيِّنٌ وَّقَدۡ خَلَقۡتُكَ مِنۡ قَبۡلُ

(९) आदेश भयो कि (वचन) यसैप्रकार भइसक्यो, तिम्रो प्रभुले भनिदियो कि यो मेरो लागि त

---

[1]अल्लाह तआ़लाले न केवल प्रार्थना स्वीकार गऱ्यो बरु त्यस बालकको नामाकरण पनि गरिदियो ।

[2] عاقر (आकिर) त्यस स्त्रीलाई पनि भनिन्छ, जो आफ्नो बृद्धा अवस्थाको कारण सन्तान जन्माउनुको योग्यताबाट बञ्चित भइसकेका छन् तथा प्रारम्भदेखि नै बाँझोलाई पनि भन्दछन् । यहाँ यो अर्के अर्थमा छ । जुन काठ सुकिसकेको हुन्छ, त्यसलाई عتيـا (यतिय्या) भन्दछन् । तात्पर्य बुढेसको अन्तिम चरण हो, जसमा हाडहरु सुकिसकेका हुन्छन् । अर्थ यो हो कि मेरी पत्नी त युवा अवस्थादेखि नै बाँझो छे तथा म बुढेस बृद्धा अवस्थाको अन्तिम चरणमा पुगिसकेको छु, अब सन्तान कसरी सम्भव छ ? भनिन्छ कि आदरणीय ज़करीया पत्नीको नाम अशाअ बिन्ते फ़ाकूद बिन मील थियो तथा यिनी आदरणीय हना (मरियमकी आमा) कि बहिनी हुन् । तर धेरै उचित कथन लाग्दछ कि आदरणीय अशाअ पनि आदरणीय इमरानकी पुत्री हुन्, जुन आदरणीय मरियमको पनि पिता थिए । यसप्रकार आदरणीय यहया तथा ईशदूत ईसा आपसमा दिदी-बहिनीहरुका छोरा हुन् । हदीस सहीहबाट पनि यसको पुष्टि हुन्छ । (फ़तहुल क़दीर)

وَلَمْ تَكُ شَيْـًٔا ۝٩

बिल्कुलै सरल छ तथा तिमी स्वयं जबकि केही थिएनौं मैले तिमीलाई पैदा गरिसकेको छु ।[1]

قَالَ رَبِّ اجْعَل لِّيٓ اٰيَةً ؕ قَالَ اٰيَتُكَ اَلَّا تُكَلِّمَ النَّاسَ ثَلٰثَ لَيَالٍ سَوِيًّا ۝١٠

(१०) भन्नलागे हे मेरा प्रभु ! मेरो लागि कुनै लक्षण निश्चित गरिदेउ, आदेश भयो कि तिम्रो लक्षण यो हो कि स्वस्थ हुनुको उपरान्त पनि तीन रात दिनसम्म कुनै व्यक्तिसित कुरा गर्ने छैनौं ।[2]

فَخَرَجَ عَلٰى قَوْمِهٖ مِنَ الْمِحْرَابِ فَاَوْحٰٓى اِلَيْهِمْ اَنْ سَبِّحُوْا بُكْرَةً وَّعَشِيًّا ۝١١

(११) अब ज़करिया आफ्नो कोठा (मेहराब)[3] बाट निस्कि आफ्ना समुदायको पास आइ उनीहरुलाई संकेत गर्दछन् कि तिमी प्रात: तथा संयम अल्लाहको पवित्रताको वर्णन गर ।[4]

---

[1]फरिश्ताहरुले आदरणीय ज़करीयाको विस्मय हटाउनको लागि भनें कि अल्लाह तआलाले तिमीलाई पुत्र प्रदान गर्ने निर्णय गरिसकेछ, जसअनुसार तिमी अवश्य पुत्र प्राप्त गर्नेछौ, तथा यो अल्लाहको लागि कदापि कठिन छैन किनकि जब तिमीलाई वचन दिनसक्छ, त तिमीलाई प्रत्येक साधनबाट हटेर पुत्र पनि प्रदान गर्नसक्छ ।

[2]रातहरुबाट तात्पर्य दिन तथा रात हुन् سويا (सवीय्या) को अर्थ हो बिल्कुल ठीक-ठीक, स्वस्थ अर्थात् यस्तो कुनै रोग हुनेछैन जुन तिमीलाई बोल्नबाट रोक्न सकोस् । तर यसको उपरान्त तिम्रो मुखबाट वार्तालाप हुन सकेन भने यो बुझिहाल्नु कि शुभसूचनाका दिन निकट आइहाले ।

[3] محـــراب (मेहराब) सित तात्पर्य त्यो कोठा जसमा अल्लाहको आराधना (इबादत) गर्दथे । यो حرب (हरब) शब्दले बनेको छ, حرب त्यसको अर्थ हो युद्ध । अर्थात् उपासना स्थल (इबादतगाह) मा रहेर अल्लाहको उपासना (इबादत गर्नु) यस्तै छ कि जस्तो शैतानसित लडिराखेको छ ।

[4]प्रात: तथा साँझ अल्लाहको प्रशंसाले तात्पर्य फ़ज्र तथा अस्रका नमाज़ हुन् । अथवा यो अर्थ हो कि यी दुई समयमा अल्लाहको प्रशंसा, महिमा तथा पवित्रताका वर्णनको विशेष आयोजन गर ।

| | |
|---|---|
| (१२) हे यहया ! (मेरो) किताब[१] लाई दृढताले समात तथा हामीले त्यसलाई बाल्यकालदेखि नै ज्ञान प्रदान गर्‍यौं ।[२] | يَٰيَحْيَىٰ خُذِ ٱلْكِتَٰبَ بِقُوَّةٍ ۖ وَءَاتَيْنَٰهُ ٱلْحُكْمَ صَبِيًّا ﴿١٢﴾ |
| (१३) तथा आफ्नो पासबाट दया तथा पवित्रता पनि[३] त्यो परहेज़गार (सन्त) व्यक्ति थियो । | وَحَنَانًا مِّن لَّدُنَّا وَزَكَوٰةً ۖ وَكَانَ تَقِيًّا ﴿١٣﴾ |
| (१४) तथा आफ्नो माता-पितासँग सुशील थियो, त्यो क्रुर तथा पापी थिएन ।[४] | وَبَرًّۢا بِوَٰلِدَيْهِ وَلَمْ يَكُن جَبَّارًا عَصِيًّا ﴿١٤﴾ |
| (१५) त्यसमाथि शान्ति छ जुन दिन उसले जन्म लियो तथा जुन दिन त्यो मर्छ तथा जुन दिन त्यो जीवित गरी उठाइनेछ ।[५] | وَسَلَٰمٌ عَلَيْهِ يَوْمَ وُلِدَ وَيَوْمَ يَمُوتُ وَيَوْمَ يُبْعَثُ حَيًّا ﴿١٥﴾ |

[१]अर्थात् अल्लाह तआलाले आदरणीय ज़करीयालाई यहया प्रदान गर्‍यो, तथा जब उनी ठूला भए, यद्यपि अझै बालक थिए, उनलाई अल्लाहले किताबलाई दृढताले समात्न अर्थात् उसको आदेशानुसार कर्म गर्ने आदेश दियो । किताबसित तात्पर्य तौरात हो अथवा उनीमाथि विशेषरुपले अवतरित कुनै पुस्तक हो, जसको अब हामीलाई कुनै ज्ञान छैन ।

[२] حكم (हुक्म) सित तात्पर्य, समय, बोध, किताबमा लिखित धार्मिक आदेशहरुको समझ, ज्ञान तथा कर्मको समिश्रण अथवा नबूअत तात्पर्य हो । इमाम शौकानी भन्नुहुन्छ कि यस कुरामा कुनै रुकावट छैन कि حكم (हुक्म) मा यी सबै कुराहरु सम्मिलित छन् ।

[३] حنانا (हनानन) प्रेम तथा दया, अर्थात् हामीले उसलाई माता-पिता तथा सम्बन्धिहरुसित प्रेम तथा दया गर्ने भाव तथा उसलाई मनभित्रको मैलो तथा पापहरुबाट शुद्धता एवं पवित्रता पनि प्रदान गर्‍यौं ।

[४]अर्थात् आफ्नो माता-पिताको अथवा आफ्नो प्रभुको अवहेलना गर्नेवालाहरु मध्येको थिएन । यसको अर्थ यो हो कि यदि कसैको हृदयमा माता-पिताको प्रेम तथा आदर एवं उनका आज्ञापालन तथा सेवा एवं सद्व्यवहारको भावना अल्लाह तआला उत्पन्न गर्दछ भने यो उसको विशेष कृपा एवं दया हो तथा यसको विपरीत भावना तथा व्यवहार अल्लाह तआलाको विशेष कृपाबाट बञ्चित हुने कुरोको परिणाम हो।

[५]तीन अवसर मानिसका लागि अत्यन्त भयावह हुन्छन् । (१)-जब मनुष्य माताको गर्भबाट बाहिर आउँछ, (२)-जब मृत्युको पञ्जा उसलाई आफ्नो पकडमा लिन्छ, (३)-जब उसलाई कब्र (चिहान) बाट जीवित पारी उठाइनेछ, तब त्यो आफूलाई मैदान हश्रको भयानकतामा घेरिएको पाउनेछ । अल्लाह तआलाले आदेश गर्‍यो यी तीनै स्थानहरुमा त्यसको लागि हाम्रो तर्फबाट

(१६) यस किताबमा मरियमको कथा पनि वर्णन गर जबकि त्यो आफ्नो परिवारका मानिसहरुबाट अलग्ग भई पूर्वतिर लागिन्।

وَاذْكُرْ فِي الْكِتٰبِ مَرْيَمَ ۘ إِذِ انْتَبَذَتْ مِنْ أَهْلِهَا مَكَانًا شَرْقِيًّا ﴿١٦﴾

(१७) तथा उनीहरुबाट पर्दा गरिन्,[1] अनि हामीले त्यसको पासमा आफ्नो आत्मा (जिब्रील अलैहिस्सलाम) लाई पठायौं, तब त्यो त्यसको समक्ष पूर्ण मनुष्यको रुपमा प्रकट भयो।[2]

فَاتَّخَذَتْ مِنْ دُونِهِمْ حِجَابًا ۖ فَأَرْسَلْنَا إِلَيْهَا رُوحَنَا فَتَمَثَّلَ لَهَا بَشَرًا سَوِيًّا ﴿١٧﴾

सुरक्षा तथा शान्ति छ। केही मानिसहरु जो धर्ममा नयाँ कुराहरु रच्दछन् यस आयतबाट जन्म दिनमा ईद-मिलादका अर्थ निकाल्दछन्। परन्तु कोही उनीहरुसित सोधोस् त कि फेरि मृत्युका दिन 'ईद वफ़ात' (मृत्यु वर्षी) पनि मनाउन आवश्यक हुनेछ किनकि जुनप्रकार जन्मदिनको लागि 'सलाम' छ, मृत्युको दिनको लागि पनि सलाम छ। यदि मात्र शब्द 'सलाम' बाट 'ईद मिलाद' को पुष्टि सम्भव छ भने त यसै शब्दबाट 'ईद वफात' को पनि पुष्टि हुन्छ। परन्तु यहाँ मृत्युको ईद त टाढै जाओस्, प्रारम्भदेखि मृत्युकै इन्कार छ। अर्थात नबी सल्लल्लाहु अलैहि वसल्लमको मृत्युलाई अस्वीकार गरेर कुर्आनका शब्दहरुलाई अस्वीकार त गर्दछन् नै, स्वयं आफ्नो भावार्थको आधारमा एउटा भागलाई मान्दछन्, तथा त्यसै आयतको दोस्रो भागलाई, उनैको भावार्थको आधारमा जुन सिद्ध हुन्छ, अस्वीकार गर्दछन्।

﴿أَفَتُؤْمِنُونَ بِبَعْضِ الْكِتٰبِ وَتَكْفُرُونَ بِبَعْضٍ﴾

"के किताबका केही भागमा विश्वास गर्दछन् तथा केहीको इन्कार गर्दछौ ?" (सूर: अल-बक़र:-८५)

[1]यो विभाजन तथा पर्दा अल्लाहको इबादतको उद्देश्यको लागि थियो ताकि उनलाई कसैले नदेखोस् तथा एकाग्रता रहोस् अथवा मासिक धर्मको पवित्रताको लागि। तथा पूर्वी स्थानबाट तात्पर्य बैतुल मोकद्दसको पूर्वी भाग हो।

[2] روح (रुह) बाट तात्पर्य आदरणीय जिब्रील हुन्, जसलाई पूर्ण मनुष्यको रुपमा आदरणीय मरियमको पासमा पठाइयो, जब आदरणीया मरियमले देखिन् कि एउटा व्यक्ति विना रुकावट भित्र प्रवेश गरिसकेको छ, त तर्सिहालिन् कि कुविचारले त आएको होइन। आदरणीय जिब्रीलले भने म त्यो होइन जुन तिमी ठानिराखेका छौ बरु तिम्रो प्रभुको सन्देशवाहक हूँ तथा यो शुभ-सूचना दिन आएको हूँ कि तिमीलाई अल्लाह तआलाले एउटा पुत्र प्रदान गर्नेछ, प्रत्यक्ष कारणहरुका आधारमा आदरणीय जिब्रीलले कुर्ताको गला (कलर) मा फू गरेका थिए, जसबाट अल्लाहको आदेशानुसार गर्भधारण भयो। अतः प्रदानलाई आफूसित सम्बन्धित गऱ्यो।

قَالَتْ إِنِّيٓ أَعُوذُ بِٱلرَّحْمَٰنِ مِنكَ إِن كُنتَ تَقِيًّا ⑱

(१८) उनले भनिन् म तिमीसित दयालु (रहमान) को शरण माँग्दछु यदि तिमी अलिकति पनि अल्लाहसित तर्सनेवाला हौ (भने यहाँबाट हटिहाल्नेछौ) ।

قَالَ إِنَّمَآ أَنَا۠ رَسُولُ رَبِّكِ لِأَهَبَ لَكِ غُلَٰمًا زَكِيًّا ⑲

(१९) (उसले) भन्यो कि म अल्लाहबाट पठाइएको सन्देशवाहक हूँ, तिमीलाई एउटा पवित्र बालक दिन आएको हूँ ।

قَالَتْ أَنَّىٰ يَكُونُ لِي غُلَٰمٌ وَلَمْ يَمْسَسْنِي بَشَرٌ وَلَمْ أَكُ بَغِيًّا ⑳

(२०) भन्नथालिन् कि मकहाँ बालक कसरी हुन सक्दछ ? मलाई त कुनै पुरुषको हातसम्म स्पर्श भएन तथा न म व्यभिचारी हूँ ।

قَالَ كَذَٰلِكِ قَالَ رَبُّكِ هُوَ عَلَيَّ هَيِّنٌ وَلِنَجْعَلَهُۥٓ ءَايَةً لِّلنَّاسِ وَرَحْمَةً مِّنَّا

(२१) उसले भन्यो कुरा त यही हो,[1] परन्तु तिम्रो प्रभुको आदेश छ कि मेरो लागि अति सहज छ, हामी त त्यसलाई मानिसहरुका लागि एउटा प्रतीक बनाइदिनेछौं[2]



[1]अर्थात् यो कुरा त सत्य छ कि तिमीलाई कुनै पुरुषले स्पर्श गरेन, उचितरुपले तथा अनुचितरुपले जबकि गर्भधारणको लागि स्वभाविक रुपले यो आवश्यक छ ।

[2]अर्थात् म सामान्य साधनहरुका लागि बाध्य छैन । मेरो लागि यो बिल्कुलै सरल छ तथा हामी त्यसलाई आफ्नो सामर्थ्यको एउटा निशानी बनाउन चाहन्छौं । यसभन्दा पूर्व हामीले तिम्रो पिता आदमलाई बिना स्त्री अथवा पुरुष पैदा गऱ्यौं, तथा तिम्रो माता हव्वालाई बिना स्त्री केवल पुरुषबाट तथा सबै सृष्टिका जीवधारीहरुलाई स्त्री तथा पुरुषको योगबाट जन्म दियौं, तथा अब ईसालाई जन्म दिएर चौथो अवस्थामा पनि सृष्टि गरेर आफ्नो सामर्थ्यको प्रदर्शन गर्न चाहन्छौं तथा त्यो हो केवल स्त्रीको गर्भबाट बिना पुरुष पैदा गरिदिनु । हामी उत्पत्तिका चारैवटा रुपहरुमाथि सामार्थ्य राख्दछौं ।

وَكَانَ أَمْرًا مَّقْضِيًّا ﴿٢١﴾

तथा आफ्नो विशेष कृपा,[1] यो त एउटा निर्धारित कुरो हो ।[2]

فَحَمَلَتْهُ فَانتَبَذَتْ بِهِ مَكَانًا قَصِيًّا ﴿٢٢﴾

(२२) अनि त्यो गर्भवती भई तथा यसैकारण त्यो एकाग्र भई एउटा टाढा स्थानमा गइन् ।

فَأَجَاءَهَا الْمَخَاضُ إِلَىٰ جِذْعِ النَّخْلَةِ قَالَتْ يَا لَيْتَنِي مِتُّ قَبْلَ هَٰذَا وَكُنتُ نَسْيًا مَّنسِيًّا ﴿٢٣﴾

(२३) त्यस पश्चात त्यसलाई प्रसव पीडाले एउटा ख़जूरको वृक्षको हाँगामुनि ल्यायो तथा व्यथाले एक्कासि मुखबाट निस्कियो कि ओह ! यो भन्दा पूर्व नै म मरिहाल्थें तथा मानिसहरुको स्मरणबाट विस्मृत हुन पुग्थें ।[3]

فَنَادَاهَا مِن تَحْتِهَا أَلَّا تَحْزَنِي قَدْ جَعَلَ رَبُّكِ تَحْتَكِ سَرِيًّا ﴿٢٤﴾

(२४) यत्तिकैमा उसलाई (ख़जूरको रुखको) मुनिबाट नै आवाज आयो कि चिन्तित नहोउ, तिम्रो प्रभुले तिमी मुनि एउटा जलस्रोत प्रवाहित गरिदिएको छ ।



---

[1]यसबाट तात्पर्य नबूअत हो, जुन अल्लाहको विशेष कृपा हो तथा उनका लागि पनि जो यस नबूअतमा ईमान ल्याउनेछन् ।

[2]यो त्यसै कथनको परिशिष्ट हो जुन जिब्रीलले अल्लाहको तर्फबाट वर्णन गरेका छन् । अर्थात यो चमत्कारिक उत्पत्ति त अल्लाहको ज्ञान तथा त्यसको चाहत एवं सामर्थ्यमा निर्धारित छ ।

[3]मृत्युको कामना यस भयले गर्‍यौं कि म बालकको समस्यामा मानिसहरुलाई कसरी शान्त गर्न सक्ने छु जबकि मेरो कुरा मान्नलाई कोही तयार हुनेछैन । तथा यो विचार पनि स्वभाविक थियो कि केही मेरो प्रसिद्धि एउटा इबादत गर्नेवाली तथा पवित्रको रुपमा छ तथा त्यसको पश्चात म मानिसहरुको दृष्टिमा व्यभिचारणी ठहरिने छु ।

وَهُزِّيٓ إِلَيۡكِ بِجِذۡعِ ٱلنَّخۡلَةِ تُسَٰقِطۡ عَلَيۡكِ رُطَبٗا جَنِيّٗا ﴿٢٥﴾

(२५) तथा त्यस खजूरको हाँगालाई आफूतिर हल्लाउ, यसले तिम्रो समक्ष ताजा पाकेका खजूर खसालिदिनेछ ।[1]

فَكُلِي وَٱشۡرَبِي وَقَرِّي عَيۡنٗاۖ فَإِمَّا تَرَيِنَّ مِنَ ٱلۡبَشَرِ أَحَدٗا فَقُولِيٓ إِنِّي نَذَرۡتُ لِلرَّحۡمَٰنِ صَوۡمٗا فَلَنۡ أُكَلِّمَ ٱلۡيَوۡمَ إِنسِيّٗا ﴿٢٦﴾

(२६) अब निश्चित भई खाउ-पिउ तथा आँखाहरुलाई शीतल पार,[2] यदि तिमीलाई कोही मानिस देखिन्छ भने भनिदिनु[3] कि म अल्लाह कृपालुको नामको ब्रत बसेको छु। म आज कुनै व्यक्तिसँग कुरा गर्ने छैन ।

فَأَتَتۡ بِهِۦ قَوۡمَهَا تَحۡمِلُهُۥۖ قَالُواْ يَٰمَرۡيَمُ لَقَدۡ جِئۡتِ شَيۡـٔٗا فَرِيّٗا ﴿٢٧﴾

(२७) अब (आदरणीय ईसा) लाई लिएर त्यो आफ्नो समुदायमा आउ । सबैले भने कि मरियम तिमीले ठूलै कुकर्म गर्‍यौ ।

يَٰٓأُخۡتَ هَٰرُونَ مَا كَانَ أَبُوكِ ٱمۡرَأَ سَوۡءٖ وَمَا كَانَتۡ أُمُّكِ بَغِيّٗا ﴿٢٨﴾

(२८) हे हारुनकी बहिनी ![4] न त तिम्रो बुवा नराम्रो मानिस थियो न तेरी आमा व्यभिचारी थिइन् ।

[1] سريا (सरीय्या) सानो नदी अथवा पानीको स्रोतलाई भन्दछन् । अर्थात् चमत्कार स्वरुप तथा अस्वभाविक रुपले अल्लाह तआलाले आदरणीय मरियमका चरणहरुमुनि, पिउने पानी तथा खानको लागि सुकेका वृक्षबाट पाकेका ताजा खजूरहरुको प्रवन्ध गरिदियो । आवाज दिनेवाला आदरणीय जिब्रील थिए जसले घाटीमुनिबाट आवाज दिए तथा भनिन्छ कि سري (सरीय) सरदारका अर्थहरुमा छ तथा यसबाट तात्पर्य ईसा अलैहिस्सलाम हुन्, उनले नै आदरणीय मरियमलाई मुनिबाट आवाज दिएका थिए ।

[2] अर्थात् खजूरहरु खाउ, स्रोतका पानी पिउ तथा बालकलाई देखेर आँखालाई शीतल पार ।

[3] यो भन्नु पनि संकेतबाट थियो, मुखबाट होइन । यसका अतिरिक्त उनीकहाँ ब्रतको अर्थ नै खानु तथा बोल्नुबाट पन्छिनु थियो ।

[4] हारुनबाट तात्पर्य सम्भव छ उनको दाजु हो, यो पनि सम्भव छ कि हारुनबाट तात्पर्य हारुन रसूल (मुसाका भाइ) नै हुन् तथा अरबहरुको जस्तै उनको सम्बन्ध हारुनतिर जोडिदियो । जस्तो भनिन्छ يا أخا العرب، يا أخا تميم आदि अथवा अल्लाहको भय,

فَأَشَارَتْ إِلَيْهِ ۖ قَالُوا كَيْفَ نُكَلِّمُ مَن كَانَ فِي الْمَهْدِ صَبِيًّا ﴿٢٩﴾

(२९) (मरियमले) आफ्नो बच्चातिर संकेत गरिन्। मानिसहरु भन्नथाले कि हामी काखको बालकसित कसरी कुरा गर्नसक्छौं ?

قَالَ إِنِّي عَبْدُ اللَّهِ آتَانِيَ الْكِتَابَ وَجَعَلَنِي نَبِيًّا ﴿٣٠﴾

(३०) बच्चाले बोल्यो कि म अल्लाह तआलाको भक्त हूँ, उसले मलाई किताब प्रदान गरेको छ। तथा मलाई आफ्नो दूत (पैग़म्बर) बनाएको छ।[1]

وَجَعَلَنِي مُبَارَكًا أَيْنَ مَا كُنتُ وَأَوْصَانِي بِالصَّلَاةِ وَالزَّكَاةِ مَا دُمْتُ حَيًّا ﴿٣١﴾

(३१) तथा उसले मलाई शुभ बनाएको छ।[2] म जहाँ रहेपनि तथा उसले मलाई नमाज़ तथा ज़कातको आदेश दिएको छ, जबसम्म म जीवित रहनेछु।

وَبَرًّا بِوَالِدَتِي وَلَمْ يَجْعَلْنِي جَبَّارًا شَقِيًّا ﴿٣٢﴾

(३२) तथा उसले मलाई आफ्नी माताको सेवक बनाएको छ।[3] तथा मलाई क्रुर तथा अभागी बनाएन।[4]

---

पवित्रता तथा इबादतमा आदरणीय हारुनको जस्तै उनलाई बुझाउँदै उनलाई उपमा तथा समानताको आधारमा हारुनकी बहिनी भनिएको होस्, यसका उदाहरण कुर्आन करीममा पनि विद्यमान छन्। (ऐसरुत्तफ़ासीर)

[1]अर्थात् निश्चित ज्ञानमा नै अल्लाहले मेरा लागि निर्णय गरिदिएको छ कि त्यसले मलाई किताब तथा नबूअतबाट सुशोभित गर्नेछ।

[2]अल्लाहको धर्ममा दृढता, अथवा प्रत्येक वस्तुमा अधिकता, उच्चता एवं सफलता मेरो सौभाग्यमा छ अथवा मानिसहरुका लागि लाभकारी, शुभ-चिन्तक अथवा मान्ने कुराहरुको आदेश दिनेवाला तथा नराम्रो कुराबाट रोक्नेवाला। (फ़तहुल क़दीर)

[3]मात्र आमासँग सद्व्यवहारको वर्णनबाट पनि स्पष्ट छ कि आदरणीय ईसाको जन्म बिना पिता एउटा चमत्कारिक प्रतिष्ठाको द्योतक हो वा आदरणीय ईसालाई पनि, आदरणीय यहयाको जस्तो برا بوالديه (माता-पितासँग सद्व्यवहार गर्नेवाला) भन्थे, यो भन्दैनथे कि मातासँग सद्व्यवहार गर्नेवाला हुन्।

[4]यसको अर्थ यो हो कि जो माता-पिताको सेवा तथा आज्ञापालन गर्नेवाला हुँदैन, उसको प्रकृतिमा क्रुरता तथा भाग्यमा दूर्भाग्य लेखेको छ। आदरणीय ईसाले

وَالسَّلٰمُ عَلَيَّ يَوْمَ وُلِدْتُّ وَيَوْمَ اَمُوْتُ وَيَوْمَ اُبْعَثُ حَيًّا ﴿٣٣﴾

(३३) तथा ममाथि मेरो जन्मका दिन तथा मेरो मृत्युका दिन तथा जुन दिन कि म पुन: जीवित उभ्याइने छु सलाम नै छ ।

ذٰلِكَ عِيْسَى ابْنُ مَرْيَمَ ۚ قَوْلَ الْحَقِّ الَّذِيْ فِيْهِ يَمْتَرُوْنَ ﴿٣٤﴾

(३४) यो हो सत्य कथा ईसा पुत्र मरियमको, यही हो सत्य कुरा जसमा मानिसहरु शंका तथा सन्देहमा लिप्त छन् ।[1]

مَا كَانَ لِلّٰهِ اَنْ يَّتَّخِذَ مِنْ وَّلَدٍ ۙ سُبْحٰنَهٗ ؕ اِذَا قَضٰۤى اَمْرًا فَاِنَّمَا يَقُوْلُ لَهٗ كُنْ فَيَكُوْنُ ﴿٣٥﴾

(३५) अल्लाहका लागि सन्तान हुनु उचित छैन, त्यो त अत्यन्त शुद्ध छ, त्यो त कुनै कार्य गर्न विचार गर्दछ भने त्यसलाई भन्दछ कि भईहाल, त्यो त्यतिखेर भईहाल्छ ।[2]

وَاِنَّ اللّٰهَ رَبِّيْ وَرَبُّكُمْ فَاعْبُدُوْهُ ؕ هٰذَا صِرَاطٌ مُّسْتَقِيْمٌ ﴿٣٦﴾

(३६) मेरो तथा तिमी सबैको प्रभु अल्लाह तआला नै हो । तिमी सबै उसैको उपासना (इबादत) गर, यही सोझो मार्ग हो ।

---

सबै कुराहरुलाई भूतकालमा गरेका छन्, जबकि उनको सम्बन्ध भविष्यकालसित थियो, किनभने अहिले त उनी नवजात शिशु नै थिए । यो यसकारण कि यी अल्लाहद्वारा लेखिएका भाग्यका यस्ता अटल निर्णय थिए कि यद्यपि यी प्रदर्शित भएका थिएनन्, परन्तु तिनको प्रदर्शित हुनु त्यसैप्रकार निश्चित थियो जुनप्रकार भूतकालमा घटित घटनाहरु शंका वा सन्देहबाट टाढा हुन्छन् ।

[1]अर्थात् यी हुन् ती गुण जसबाट आदरणयि ईसा सुशोभित गरिएका थिए न कि ती गुणहरुबाट युक्त थिए जुन इसाईहरुले अतिश्योक्तिको प्रयोग गरी उनको विषयमा मनाउन लगाए तथा न यस्ता जुन यहूदीहरुले कमी तथा त्रुटिहरुबाट काम लिदै उनका विषयमा भने तथा यही कुरा सत्य छ, जसमा मानिसहरु व्यर्थमा सन्देह गर्दछन् ।

[2]जुन अल्लाहको यो महिमा तथा सामर्थ्य छ, उसलाई सन्तानको के आवश्यकता ? तथा उसको लागि बिना पिता जन्म दिनु कुन गाह्रो काम हो ? अर्थात् जो अल्लाहका लागि सन्तान सिद्ध गर्दछन् अथवा आदरणीय ईसाको चमत्कारी जन्मलाई अस्वीकार गर्दछन्, उनी वास्तवमा अल्लाहको सामर्थ्य तथा शक्तिलाई अस्वीकार गर्दछन् ।

(३७) अनि (यी) गुट आपसमा मतभेद गर्नथाले ।[1] परन्तु काफ़िरहरुका लागि (विनाश) दुख छ एउटा ठूलो दिनको उपस्थितिबाट ।[2]

فَاخْتَلَفَ الْأَحْزَابُ مِنْ بَيْنِهِمْ فَوَيْلٌ لِلَّذِينَ كَفَرُوا مِنْ مَشْهَدِ يَوْمٍ عَظِيمٍ ﴿٣٧﴾

(३८) राम्ररी देख्नेवाला तथा सुन्नेवाला त्यसदिन हुनेछन् जबकि हाम्रा समक्ष उपस्थित हुनेछन्[3] तर आज त यी अत्याचारी मानिसहरु प्रष्टरुपले पथ-विचलनमा परेका छन् ।

أَسْمِعْ بِهِمْ وَأَبْصِرْ يَوْمَ يَأْتُونَنَا لَٰكِنِ الظَّالِمُونَ الْيَوْمَ فِي ضَلَالٍ مُبِينٍ ﴿٣٨﴾

(३९) तथा तिमी उनीहरुलाई यस दुख एवं निराशाका दिनको भय[4] सुनाइदेउ जबकि कार्य अन्तसम्म पुऱ्याइ

وَأَنْذِرْهُمْ يَوْمَ الْحَسْرَةِ إِذْ قُضِيَ

---

[1]यहाँ الأحزاب (अल-अहज़ाब) बाट तात्पर्य अहले किताबका गुट तथा स्वयं ईसाइहरुका गुट हुन् जसले आदरणीय ईसाका विषयमा आपसमा मतभेद गरे । यहूदीहरुले भने कि त्यो जादूगर तथा व्यभिचारबाट जन्मेको पुत्र हो अर्थात् यूसुफ डकर्मीका पुत्र हुन्, इसाईहरुका प्रोटेस्टेन्ट गुटले भने कि अल्लाहका पुत्र हुन्, कैथोलिक गुटले भन्यो कि उनी तीन भगवानहरु मध्येबाट तेस्रा हुन् तथा तेस्रो अर्थोडक्स गुटले भन्यो उनी भगवान हुन् । यसप्रकार यहूदीहरुले निन्दा तथा त्रुटि गरे तथा ईसाइहरुले अत्याधिक अतिश्योक्तिबाट काम लिए । (ऐसरुत्तफ़ासीर तथा फ़तहुल क़दीर)

[2]ती काफ़िरहरुका लागि जसले ईसाका विषयमा यसप्रकार मतभेद तथा अतिश्योक्ति एवं विरोधका कार्य गरे, केयामतका दिन जब त्यहाँ उपस्थित हुनेछन्, विनाश छ ।

[3]यो विस्मयको भावमा छ अर्थात् दुनियाँमा त सत्यालाई देख्न तथा सुन्नबाट अन्धा बहिरा रहे, परन्तु आख़िरतमा उनी राम्ररी देख्ने तथा सुन्नेवाला छन् ? परन्तु त्यहाँ यो देख्नु तथा सुन्नु कुन कामको ?

[4]केयामतका दिनलाई पश्चातापको दिन भन्यो, यसकारण कि त्यसदिन सबै पश्चाताप गर्नेछन् । कुकर्मी शोक गर्नेछन् कि यदि उनीहरुले नराम्रो कर्म नगरेको भए, तथा सत्कर्मी यो अनुताप गर्नेछन् कि उनीहरुले अझै पुण्य कमाएनन् ?

الْأَمْرُ وَهُمْ فِي غَفْلَةٍ وَهُمْ لَا يُؤْمِنُونَ ﴿٣٩﴾

दिइनेछ[१] तथा यी मानिसहरु अचेत तथा बेइमानीमा नै रहिरहनेछन् ।

إِنَّا نَحْنُ نَرِثُ الْأَرْضَ وَمَنْ عَلَيْهَا وَإِلَيْنَا يُرْجَعُونَ ﴿٤٠﴾

(४०) निःसन्देह धर्तीका तथा धर्तीवासीहरुका संरक्षक हामी नै हुनेछौं र सबै हामीतिरै फर्काइ ल्याइनेछन् ।

وَاذْكُرْ فِي الْكِتَابِ إِبْرَاهِيمَ ۚ إِنَّهُ كَانَ صِدِّيقًا نَّبِيًّا ﴿٤١﴾

(४१) यस किताबमा इब्राहीम (को कथा) को वर्णन गर, निःसन्देह उनी अति, सत्यवादी पैग़म्बर (ईशदूत) थिए ।[२]

إِذْ قَالَ لِأَبِيهِ يَا أَبَتِ لِمَ تَعْبُدُ مَا لَا يَسْمَعُ وَلَا يُبْصِرُ وَلَا يُغْنِي عَنكَ شَيْئًا ﴿٤٢﴾

(४२) जबकि उनले आफ्नो पितासित भने कि हे पिता ! तपाईं तिनको पूजा किन गरिराख्नु भएको छ जो न सुन्न सक्दछन् न देख्न सक्छन् न तपाईंलाई केही लाभ पुऱ्याउन सक्छन् ।

[१]अर्थात् हिसाब-किताब गरी तथ्याङ्क पुस्तिकाहरु बेरिने छन् तथा स्वर्गमा जाने स्वर्गमा तथा नरक़मा जाने नरक़मा जानेछन् । हदीसमा चर्चा छ कि त्यस पश्चात मृत्युलाई भेंडाको रुपमा ल्याइनेछ तथा स्वर्ग तथा नरक़को मध्ये उभ्याइनेछ, स्वर्ग तथा नरकवाला दुबैसित सोधिनेछ, यसलाई चिन्छौ, यो के हो ? उनीहरु भन्नेछन् हो ! यो मृत्यु हो अनि उनका समक्ष त्यसलाई वध गरिनेछ तथा घोषणा गरिनेछ, हे स्वर्गमा रहनेवालाहरु ! तिम्रा निम्ति स्वर्गका जीवन सधैंको लागि हो, अब मृत्यु आउने छैन । नरकवालाहरुसित भनिनेछ, हे नरकवालाहरु ! तिम्रा निम्ति नरक़को यातना थाई छ, अब मृत्यु आउने छैन । (सहीह बुख़ारी, तफ़सीर सूरः मरियम तथा सहीह मुस्लिम किताबुल जन्नः बाबुन नार, यदखुलुहा अल-ज़ब्बारून)

[२]صِدِّيق (सिद्दिक) صِدْق (सत्यता) बाट अतिश्योक्तिको रुप हो अर्थात् ठूलो सत्यवादी । صديقيت को यो स्थान नबूअतको पश्चात सर्वश्रेष्ठ छ प्रत्येक नबी तथा रसूल आफ्नो समयको ठूलो सत्यभाषी तथा सदाचारी हुन्छ, यसकारण त्यो (सिद्दीक) पनि हुन्छ । तैपनि प्रत्येक सत्यवादी नबी हुँदैन । कुरआन करीममा आदरणीय मरियमलाई صِدِّيقَة (सिद्दीका) भनिएको छ, जसको अर्थ यो हो कि तिनी अल्लाहको भय, पवित्रता सत्यवादीमा अति उच्च पदमा आसीन थिइन्, तैपनि नबिया थिईनन् । मुसलमानहरुमा आदरणीय अबु बक्र सिद्दीकीन मध्येबाट हुन् जो नबीहरुका पश्चात मुसलमानहरुमा पुरुषोत्तम मानिएका छन् ।

(४३) (हे प्रिय) पिता ! (तपाईं हेर्नुस्) मेरो पासमा त्यो ज्ञान आएको छ, जुन तपाईंको पासमा आउँदै आएन,[१] तसर्थ तपाईं मेरो अनुशरण गर्नुस् म तपाईंलाई सोझो मार्ग देखाउनेछु ।[२]

يَٰٓأَبَتِ إِنِّي قَدۡ جَآءَنِي مِنَ ٱلۡعِلۡمِ مَا لَمۡ يَأۡتِكَ فَٱتَّبِعۡنِيٓ أَهۡدِكَ صِرَٰطٗا سَوِيّٗا ﴿٤٣﴾

(४४) मेरा पिता ! तपाईं शैतानको पूजा गर्नबाट रोकिनुस्, शैतान त कृपा तथा दया गर्ने अत्याधिक अवहेलना गर्नेवाला छ ।[३]

يَٰٓأَبَتِ لَا تَعۡبُدِ ٱلشَّيۡطَٰنَۖ إِنَّ ٱلشَّيۡطَٰنَ كَانَ لِلرَّحۡمَٰنِ عَصِيّٗا ﴿٤٤﴾

(४५) हे पिता ! मलाई डर छ कि तपाईंलाई अल्लाहको कुनै प्रकोप नआइहालोस् र तपाईं शैतानको मित्र बनिहाल्नुस् ।[४]

يَٰٓأَبَتِ إِنِّيٓ أَخَافُ أَن يَمَسَّكَ عَذَابٞ مِّنَ ٱلرَّحۡمَٰنِ فَتَكُونَ لِلشَّيۡطَٰنِ وَلِيّٗا ﴿٤٥﴾

---

[१]जसबाट मलाई आत्मज्ञान तथा अल्लाहको विश्वास प्राप्त भयो, पूनर्जीवन तथा अल्लाहका अतिरिक्त अन्यका पूजारीहरुका लागि थाई यातनाको ज्ञान भयो ।

[२]जसले तपाईंलाई स्थाई सौभाग्य तथा मोक्ष प्राप्त गराइदिनेछ ।

[३]अर्थात् शैतानका भ्रमजाल तथा त्यसका पथ-विचलनबाट तपाईं जुन यस्ता मूर्तिहरुको पूजा गर्नुहुन्छ, जुन न सुन्ने-देख्ने शक्ति राख्दछन् न लाभ-हानि पुऱ्याउने सामर्थ्य, तसर्थ यो वास्तवमा शैतानको पूजा हो, जो अल्लाहको अवज्ञाकारी छ तथा अरुहरुलाई पनि अल्लाहको अवज्ञाकारी बनाएर उनीहरुलाई आफूजस्तै बनाउनमा लागिरहन्छ ।

[४]यदि तपाईं आफ्नो कुफ्र तथा शिर्कमा अडिग रहनुभो तथा यसै अवस्थामा तपाईंको मृत्यु भयो भने अल्लाहको यातनाबाट तपाईंलाई कसैले पनि बचाउन सक्दैन । अथवा संसारमा नै अल्लाहका यातनाका शिकार बन्न सक्नुहुन्छ । आदरणीय इब्राहीमले पिताका सम्मान तथा आदरका सबै नियमहरुलाई पूर्णरुपले सुरक्षित राख्दै अत्याधिक नम्रता एवं प्रेमका शब्दहरुमा एकेश्वरवादको भाषण सुनाए । परन्तु एकेश्वरवादको यो पाठ जति कोमल एवं मधुर भावले वर्णन गरियोस्, मूतिपूजकको लागि असहनीय नै हुन्छ । अत: मूर्तिपूजक पिताले यस कोमलता तथा प्रेमको उत्तरमा अति कटुता तथा कठोरताका साथ एकेश्वरवादी पुत्रलाई भने कि यदि तिमी मेरा देवताहरुबाट मुख फर्काउनबाट रोकिएनौं भने म तिमीलाई ढुङ्गाहरुले हानेर मारिदिनेछु ।

قَالَ أَرَاغِبٌ أَنتَ عَنْ آلِهَتِي يَا إِبْرَاهِيمُ ۖ لَئِن لَّمْ تَنتَهِ لَأَرْجُمَنَّكَ ۖ وَاهْجُرْنِي مَلِيًّا ﴿٤٦﴾

(४६) (उसले) उत्तर दियो कि हे इब्राहीम ! के तिमी हाम्रा देवताहरुबाट मुख फर्काइराखेका छौ, (सुन) यदि तिमी रोकिएनौ भने म तिमीलाई ढुङ्गाहरुले मारिदिनेछु। जाउ एउटा लामो अवधिसम्म मबाट[1] अलग्ग रह ।

قَالَ سَلَامٌ عَلَيْكَ ۖ سَأَسْتَغْفِرُ لَكَ رَبِّي ۖ إِنَّهُ كَانَ بِي حَفِيًّا ﴿٤٧﴾

(४७) भने सलाम छ तिमीलाई,[2] म त आफ्नो प्रभुसित तिम्रो लागि क्षमाको प्रार्थना गरिरहने छु ।[3] त्यो ममाथि असीम कृपा गरिराखेको छ ।

وَأَعْتَزِلُكُمْ وَمَا تَدْعُونَ مِن دُونِ اللَّهِ وَأَدْعُو رَبِّي عَسَىٰ أَلَّا أَكُونَ بِدُعَاءِ رَبِّي شَقِيًّا ﴿٤٨﴾

(४८) तथा म त तिमीलाई पनि तथा ज-जसलाई तिमी अल्लाहका अतिरिक्त पुकार्दछौ उनीहरुलाई पनि (सबैलाई) छाडिरहेको छु । केवल आफ्नो प्रभुलाई पुकारिरहने छु, मलाई विश्वास छ कि म आफ्नो प्रभुसित प्रार्थना गर्नुमा असफल रहने छैन ।

---

[1] مليـــا (मलिय्या) लामो अवधि, एउटा काल । दोस्रो अर्थ यसको सुरक्षित गरिएको छ । अर्थात् मलाई मेरो अवस्थामा छाडिदेउ । कहीं मबाट आफ्नो हात-खुट्टा नभाँचियोस् ।

[2] यो सलाम अभिवादनको रुपमा होइन जुन एउटा मुसलमान अर्को मुसलमानलाई गर्दछ, बरु यो सम्बोधन समाप्त गर्नुको प्रदर्शन हो । जस्तो आयत

﴿ وَإِذَا خَاطَبَهُمُ الْجَاهِلُونَ قَالُوا سَلَامًا ﴾

"जब मूर्खहरु उनीसित कुरा गर्दछन् त उनी भन्दछन् कि सलाम छ ।" (सूरः अल-फुरक़ान-६३)

मा ईमानवालाहरु तथा अल्लाहका भक्तहरुको आचरण भनिएको छ ।

[3] यो त्यस समय भनिएको थियो जब आरदणीय इब्राहीमलाई मूर्तिपूजकका लागि मोक्षको प्रार्थना गर्न निषेधित हुने कुरोको ज्ञान थिएन, जब यो ज्ञात भयो त उहाँले यो प्रार्थना गर्नुको क्रम समाप्त गरिदिनु भयो । (सूरः अल-तौबा-११४)

فَلَمَّا اعْتَزَلَهُمْ وَمَا يَعْبُدُونَ مِنْ دُونِ اللّٰهِ ۙ وَهَبْنَا لَهٗۤ اِسْحٰقَ وَيَعْقُوْبَ ؕ وَكُلًّا جَعَلْنَا نَبِيًّا ۝

(४९) जब (इब्राहीमले) ती सबैलाई तथा अल्लाहका अतिरिक्त उनका सबै देवताहरुलाई छाडिसके त हामीले उनलाई इसहाक, तथा याकूब प्रदान गऱ्यौं[१] तथा प्रत्येकलाई नबी बनायौं ।

وَوَهَبْنَا لَهُمْ مِّنْ رَّحْمَتِنَا وَجَعَلْنَا لَهُمْ لِسَانَ صِدْقٍ عَلِيًّا ۝

(५०) तथा ती सबैलाई हामीले आफ्ना धेरै कृपा प्रदान गऱ्यौं[२] तथा हामीले उनको शुभ चर्चालाई सर्वोच्च गऱ्यौं ।[३]

وَاذْكُرْ فِي الْكِتٰبِ مُوْسٰۤى ۚ اِنَّهٗ كَانَ مُخْلَصًا وَّكَانَ رَسُوْلًا نَّبِيًّا ۝

(५१) यस किताबमा मूसाको पनि वर्णन गर, जो निर्वाचित[४] तथा रसूल एवं नबी थियो ।

---

[१] يعقوب (याकूब) आदरणीय इसहाकका पुत्र अर्थात आदरणीय इब्राहीमका पौत्र थिए । अल्लाह तआलाले उनको पनि वर्णन पुत्रसँग र पुत्रको जस्तै नै गरेको छ । अर्थ यो हो कि जब इब्राहीम अल्लाहको एकेश्वरवादको विषयमा पितालाई, घरलाई तथा आफ्नो प्रिय देशलाई छाडेर कुदसको क्षेत्रतिर प्रस्थान गरे तब हामीले उनलाई इसहाक तथा याकूब प्रदान गऱ्यौं ताकि उनको प्रेम, पिताको विछोडको शोक भुलाइदेओस् ।

[२]अर्थात् दूतत्व (नबूअत) का अतिरिक्त अन्य धेरै अनुकम्पाहरु उनलाई प्रदान गऱ्यो । जस्तै धन, सन्तान तथा पछि उसको वंशमा अधिक समयसम्म नबूअत प्रदान गर्नुको क्रम निरन्तर राख्नु, यो सबभन्दा ठूलो कृपा थियो, जुन उनीमाथि भयो । यसैकारण आदरणीय इब्राहीम नबीहरुका पिता अथवा नबीहरुका पूर्वज कहलाइन्छन्।

[३] لسان صدق सत्य वचनबाट तात्पर्य उत्तम प्रशंसा तथा शुभ कुराहरु हुन् । लिसानको सम्बन्ध सिद्कसित गरियो तत्पश्चात उसको उच्चताको गुणको वर्णन गऱ्यो, जसबाट त्यसतिर संकेत गऱ्यो कि भक्तहरुको मुखमा जुन उनको उत्तम वर्णन रहन्छ, त वास्तवमा उनी त्यसका पात्र हुन् । अत: हेर्नुस् कि सबै आकाशीय धर्महरुका अनुयायी बरु मूर्तिपूजक पनि आदरणीय इब्राहीम तथा उनको सन्तानको वर्णन बडो राम्रो शब्दहरुमा तथा अत्याधिक आदर एवं सम्मानले गर्दछन् । यो नबूअत तथा सन्तानको पश्चात एउटा अन्य वरदान हो जुन अल्लाहको मार्गमा स्थानान्तरणको कारण प्राप्त भयो ।

[४] مخلص، مصطفى، مجتبى तथा مختار चारवटै शब्दहरु सामार्थ्य छन् । अर्थात् रिसालत तथा पैगम्बरीका निम्ति रोजिएको, प्रिय व्यक्ति, रसूल, सन्देशवाहकको अर्थ छ । (पठाइएको) तथा नबीको अर्थ हो अल्लाहका सन्देश मानिसलाई सुनाउनेवाला अथवा अल्लाहको प्रकाशनाको सूचना दिनेवाला व्यक्ति यसप्रकार अल्लाहले जुन भक्तलाई मानिसहरुलाई मार्गदर्शन दिन तथा सचेत गर्नको लागि

وَنَادَيْنَٰهُ مِن جَانِبِ ٱلطُّورِ ٱلْأَيْمَنِ وَقَرَّبْنَٰهُ نَجِيًّا ﴿٥٢﴾

(५२) हामीले त्यसलाई तूर पर्वतको दायाँ किनारबाट आकाशवाणी दियौं तथा गुप्त मन्त्रण गर्दै त्यसलाई समीप गरिहाल्यौं ।

وَوَهَبْنَا لَهُۥ مِن رَّحْمَتِنَآ أَخَاهُ هَٰرُونَ نَبِيًّا ﴿٥٣﴾

(५३) तथा आफ्ना विशेष कृपाले त्यसको भाइ हारुनलाई नबी बनाएर प्रदान गर्‍यौं ।

وَٱذْكُرْ فِى ٱلْكِتَٰبِ إِسْمَٰعِيلَ ۚ إِنَّهُۥ كَانَ صَادِقَ ٱلْوَعْدِ وَكَانَ رَسُولًا نَّبِيًّا ﴿٥٤﴾

(५४) तथा यस किताबमा इस्माईल (को कथा) पनि स्मरण गर, त्यो वचनको एकदमै पक्का थियो तथा रसूल एवं नबी पनि थियो ।

وَكَانَ يَأْمُرُ أَهْلَهُۥ بِٱلصَّلَوٰةِ وَٱلزَّكَوٰةِ وَكَانَ عِندَ رَبِّهِۦ مَرْضِيًّا ﴿٥٥﴾

(५५) तथा त्यसले आ-आफ्ना परिवारवालाहरुलाई निरन्तर नमाज़ तथा ज़कात (धर्मदान) को आदेश दिन्थ्यो तथा आफ्नो प्रभुको सदनमा प्रिय तथा स्वीकृत पनि थियो ।

وَٱذْكُرْ فِى ٱلْكِتَٰبِ إِدْرِيسَ ۚ إِنَّهُۥ كَانَ صِدِّيقًا نَّبِيًّا ﴿٥٦﴾

(५६) तथा यस किताबमा इदरीसलाई पनि स्मरण गर त्यो पनि सत्यवादी ईशदूत (पैग़म्बर) थियो ।

وَرَفَعْنَٰهُ مَكَانًا عَلِيًّا ﴿٥٧﴾

(५७) हामीले त्यसलाई उच्च स्थानमा उठायौं ।[1]

छनौट गर्दछ तथा त्यसलाई आफ्नो प्रकाशनाबाट सुसज्जित गर्छ, त्यसलाई रसूल तथा नबी भनिन्छ । प्राचीनकालदेखि विद्वानहरुमा यो मतभेद चलिआइराखेको छ कि यी दुवैमा अन्तर छ कि छैन ? यदि छ भने त्यो के हो ? रसूल र नबीमा फरक निम्न प्रकार छ : (१) रसूल जसलाई आकाशीय ग्रन्थ दिइयो, तर नबीमाथि आकाशीय ग्रन्थ अवतरित भएन । (२) रसूल जसलाई नास्तिकहरुलाई मार्गदर्शन गर्न पठाइयो, तर नबी मुस्लिमहरुको लागि आउनु भयो । (३) रसूल नयाँ विधि-विधान तथा सिद्धान्त लिएर आउनु भयो, तर नबी आफूभन्दा पहिलाका नियम-कानुनको प्रचार-प्रसार गरि राखे । यसर्थ प्रत्येक रसूल नबी हुनसक्छ, तर प्रत्येक नबी रसूल हुनसक्दैन । (विस्तृत जानकारीका लागि हेर्नुस् "वरीकुल जुमान पृष्ठ: ८८" लेखक डा. मुहम्मद मुहम्मदी नूरिस्तानी)

[1]आदरणीय इद्रीस, भनिन्छ कि आदरणीय आदम पश्चात प्रथम नबी थिए तथा आदरणीय नूहका अथवा उनका पिताका हजूरबुवा थिए, उनले सर्वप्रथम वस्त्र सिउन शुरु गरे । مكانا عليا (उच्च स्थान) सित के तात्पर्य छ, केही ? व्याख्याकारहरुले यसको व्याख्या رُفع إلى السماء

أُولَٰٓئِكَ ٱلَّذِينَ أَنْعَمَ ٱللَّهُ عَلَيْهِم مِّنَ ٱلنَّبِيِّـۧنَ مِن ذُرِّيَّةِ ءَادَمَ وَمِمَّنْ حَمَلْنَا مَعَ نُوحٍ وَمِن ذُرِّيَّةِ إِبْرَٰهِيمَ وَإِسْرَٰٓءِيلَ وَمِمَّنْ هَدَيْنَا وَٱجْتَبَيْنَآ ۚ إِذَا تُتْلَىٰ عَلَيْهِمْ ءَايَٰتُ ٱلرَّحْمَٰنِ خَرُّوا۟ سُجَّدًا وَبُكِيًّا ۩ ﴿٥٨﴾



(५८) यिनै ती नबी हुन् जसमाथि अल्लाह तआ़लाले दया तथा कृपा गऱ्यो, जो आदमका सन्तान मध्येबाट थिए तथा उनीहरुका वंशबाट हुन्, जसलाई हामीले नूहका साथ डुङ्गामा चढाएका थियौं तथा इब्राहीम तथा याकूबको सन्तानबाट तथा हाम्रो तर्फबाट मार्गदर्शन प्राप्त एवं हाम्रा प्रिय मानिसहरु मध्येबाट। यिनीहरुका समक्ष जब अल्लाह कृपालुका आयतहरु पढिन्थे, तब यिनीहरु दण्डवत् (सजदा) गर्दथे तथा रुँदै-कराउँदै लडिहाल्थे।[1]

فَخَلَفَ مِنۢ بَعْدِهِمْ خَلْفٌ أَضَاعُوا۟ ٱلصَّلَوٰةَ وَٱتَّبَعُوا۟ ٱلشَّهَوَٰتِ ۖ فَسَوْفَ يَلْقَوْنَ غَيًّا ﴿٥٩﴾

(५९) अनि उनका पश्चात यस्ता कपूत जन्मे कि जसले नमाज़ बर्बाद गरिहाले तथा मनोकांक्षाको पछि लागे। अत: उनको हानि उनको समक्ष आउनेछ।

बुझेका छन् कि आदरणीय ईसा जस्तै उनीहरुलाई पनि आकाशमा उठाइयो। तर कुर्आनका शब्द यस भावार्थका लागि प्रष्ट छैनन् तथा कुनै सहीह हदीसमा पनि यसको वर्णन भएको छैन। परन्तु इस्राईली कथाहरुमा उनलाई आकाशमा उठाउने कुराको वर्णन पाईन्छ, जुन यस भावार्थको पुष्टिको निम्ति पर्याप्त छैन। यसकारण धेरै उचित कुरो यो प्रतीत हुन्छ कि त्यसबाट तात्पर्य सम्मान तथा पदवीको त्यो उच्चता हो जुन नबूअतबाट सुशोभित गरी उनलाई प्रदान गरियो।

[1]अर्थात् आयतहरु सुनेर मनको नम्रता तथा रुने कुरोको भाव उत्पन्न हुनु तथा अल्लाहको महिमाको अगाडी दण्डवत् (सजदा) को अवस्थामा भइहाल्नु, अल्लाहका भक्तहरुका विशेष लक्षण हुन्। सजदाको पाठको निम्ति सुन्नतबाट सिद्ध प्रार्थना (दुआ) यो हो «سَجَدَ وَجْهِي لِلَّذِي خَلَقَهُ، وَصَوَّرَهُ، وَشَقَّ سَمْعَهُ وَبَصَرَهُ، بِحَوْلِهِ وَقُوَّتِهِ» (अबु दाऊद तिर्मिजी तथा नसाई ससन्दर्भ मिशकात, बाब सुजुदिल कुर्आन्) केही कथनहरुमा अधिकता छ فتبارك الله أحسن الخالقين (औनुल माबूद भाग-१, पृष्ठ-५३३)

[2]अल्लाहका पुरस्कृत भक्तहरुका वर्णन गर्नुका पश्चात ती मानिसहरुको वर्णन गरिंदैछ जो उनका विपरीत अल्लाहका आदेशहरु पालन गर्नमा आलस्य तथा विमुखता गर्दछन्।

إِلَّا مَن تَابَ وَءَامَنَ وَعَمِلَ صَٰلِحًا فَأُوْلَٰٓئِكَ يَدْخُلُونَ ٱلْجَنَّةَ وَلَا يُظْلَمُونَ شَيْـًٔا ﴿٦٠﴾

(६०) तर तिनीहरु बाहेक जो क्षमा माँगदछन्, तथा ईमान ल्याउँछन् तथा पुण्यका काम गर्दछन् । यस्ता मानिस स्वर्गमा जानेछन् तथा उनीहरुका अधिकारहरुको अलिकति पनि हनन गरिने छैन ।[1]

جَنَّٰتِ عَدْنٍ ٱلَّتِى وَعَدَ ٱلرَّحْمَٰنُ عِبَادَهُۥ بِٱلْغَيْبِ ۚ إِنَّهُۥ كَانَ وَعْدُهُۥ مَأْتِيًّا ﴿٦١﴾

(६१) स्थायी रुपले स्वर्गमा रहनेहरु जसका परोक्ष वचन[2] अल्लाह दयालुले आफ्ना भक्तहरुलाई दिएको छ । निःसन्देह त्यसको वचन पूर्ण हुनेवाला नै छ ।

لَّا يَسْمَعُونَ فِيهَا لَغْوًا إِلَّا سَلَٰمًا ۖ وَلَهُمْ رِزْقُهُمْ فِيهَا بُكْرَةً وَعَشِيًّا ﴿٦٢﴾

(६२) ती मानिसहरु त्यहाँ कुनै व्यर्थ कुरा सुन्ने छैनन् मात्र सलाम नै सुन्नेछन्,[3] उनीहरुका लागि त्यहाँ प्रातः तथा साँझ उनको जीविका हुनेछ ।[4]

---

नमाज़लाई व्यर्थ गर्नुबाट तात्पर्य या त पूर्णरुपले नमाज़ छाडिदिनु हो, जुन कुफ्र हो अथवा उनको समयलाई व्यर्थ गर्नु हो अर्थात समयले नमाज़ नपढ्नु हो, जब मनमा आयो पढिहाल्यो अथवा बिना कुनै कारण एकत्रित पढ्नु अथवा कहिले दुई कहिले चार, कहिले एक तथा कहिलेकाहीं पाँचवटै नमाज़हरु । यी सबै अवस्थाहरु पनि नमाज़लाई व्यर्थ गर्नुका हुन्, जसको कर्ता निकै ठूलो पापी हो तथा आयतमा चेतावनी अनुसार दण्डको भागी हुनसक्छ । غيا को अर्थ विनाश, दुष्परिणाम हो अथवा नरकको एउटा बेसीको नाम हो ।

[1]अर्थात् जो क्षमा माँगेर नमाज़लाई छाड्नु तथा स्वेच्छा अनुसार गर्नुबाट रोकिन्छन् एवं सुधार गर्दछन् तथा ईमान एवं सदाचारका माँगहरुलाई पूरा गर्दछन् भने त्यसता मानिस उपरोक्त दुष्परिणामबाट सुरक्षित तथा स्वर्गका अधिकारी हुनेछन् ।

[2]अर्थात् यो उनका ईमान तथा विश्वासका दृढता हो कि उनले स्वर्गलाई देखेको पनि छैनन्, केवल अल्लाहबाट परोक्षरुपले गरिएको वचनमाथि नै त्यसको प्राप्तिको लागि ईमान तथा अल्लाहको भयको मार्ग अपनाए ।

[3]अर्थात् फरिश्ताहरुले पनि उनीहरुलाई हरप्रकारले सलाम गर्नेछन् तथा स्वर्गमा रहनेवाला आपसमा धेरैभन्दा धेरै सलाम गर्नेछन् ।

[4]इमाम अहमदले यसको व्याख्यामा भनेका छन् कि स्वर्गमा रात्रि तथा दिन हुने छैनन् । केवल प्रकाश नै हुनेछ । हदीसमा छ स्वर्गमा जानेवालाहरुको प्रथम गुटका मुख पूर्णिमाको जुन जस्तै प्रकाशमान हुनेछन्,

تِلْكَ الْجَنَّةُ الَّتِىْ نُوْرِثُ مِنْ عِبَادِنَا مَنْ كَانَ تَقِيًّا ﴿٦٣﴾

(६३) यो त्यो स्वर्ग हो जसको उत्तराधिकारी हामी आफ्ना भक्तहरु मध्येबाट उनीहरुलाई बनाउँछौं जो अल्लाहसित तर्सन्छन् ।

وَمَا نَتَنَزَّلُ اِلَّا بِاَمْرِ رَبِّكَ ۚ لَهٗ مَا بَيْنَ اَيْدِيْنَا وَمَا خَلْفَنَا وَمَا بَيْنَ ذٰلِكَ ۚ وَمَا كَانَ رَبُّكَ نَسِيًّا ﴿٦٤﴾

(६४) हामी तिम्रो प्रभुको आदेश बिना दिन सक्दैनौं,[1] हाम्रा अगाडी-पछाडी तथा उनका मध्येका सबै कुराहरु उसैको स्वामित्वमा छन्, तिम्रो प्रभु बिर्सनेवाला छैन ।

رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا فَاعْبُدْهُ وَاصْطَبِرْ لِعِبَادَتِهٖ ؕ هَلْ تَعْلَمُ لَهٗ سَمِيًّا ﴿٦٥﴾

(६५) आकाशहरु तथा धर्तीको एवं जे-जति उनका मध्येमा छ सबैको प्रभु त्यही हो, तिमी उसैको उपासना गर तथा उसैको आराधना (इबादत) मा अडिग भईहाल । के तिम्रो ज्ञानमा त्यसको समनाम (तथा समान) कोही अन्य पनि छ ।[2]

وَيَقُوْلُ الْاِنْسَانُ ءَاِذَا مَا مِتُّ لَسَوْفَ اُخْرَجُ حَيًّا ﴿٦٦﴾

(६६) तथा मनुष्य भन्दछ[3] कि जब म मरिहाल्नेछु त के फेरि जीवित गरी

त्यहाँ उनीहरुलाई न थूक आउनेछ न सिंगान तथा न मूत्र हुनेछ एवं न मल त्याग नै हुनेछ । उनका भाँडा तथा काईयोहरु स्वर्णकै हुनेछन् । उनका शरीर सुगन्धित तथा उनका पसीना कस्तूरी (को जस्तै) सुगन्धित हुनेछ । स्वर्गमा जाने प्रत्येकलाई दुई पत्नीहरु हुनेछन्, उनका कोखको तत्व उनको मासुको पछाडीबाट देखिनेछ, यो उनको सुन्दरता तथा आकर्षणको कारण हुनेछ । उनीहरुमा आपसमा द्वेष तथा वैरभाव हुनेछैन, प्रात: तथा सायंमकाल अल्लाहको प्रशंसा गर्नेछन् । (सहीह बुख़ारी बदऊल ख़लक़ बाब माजाआ फ़ी सिफ़तिल जन्न: व इन्नहा मख़लूकतुन तथा सहीह मुस्लिम किताबुल जन्न: बाब फ़ी सिफ़ातिल जन्न: व अहलेहा ।)

[1]नबी सल्लल्लाहु अलैहि वसल्लमले एकपटक जिब्रीलसित अधिक तथा शीघ्र-शीघ्र भेट गर्नुको इच्छा व्यक्त गर्नुभयो जसमाथि यो आयत अवतरित भयो । (सहीह बुख़ारी तफ़सीर सूर: मरियम)

[2]अर्थात् छैन, जब त्यसको समतुल्य कोही अन्य छैन त त्यसपछि पूजा पनि कुनै अन्यको मान्य छैन ।

[3]मनुष्यसित तात्पर्य यहाँ साधारण काफ़िर हुन्, जो कयामत घटित हुने तथा मर्नु पश्चात जीवित हुने कुरोमा विश्वास गर्दैनन् ।

निकालिने छु ?[१]

(६७) के यो मनुष्य यति पनि स्मरण राख्दैन कि हामीले उसलाई यसभन्दा पूर्व सृष्टि गऱ्यौं, जबकि त्यो केही पनि थिएन ।[२]

أَوَلَا يَذْكُرُ الْإِنسَانُ أَنَّا خَلَقْنَاهُ مِن قَبْلُ وَلَمْ يَكُ شَيْئًا ﴿٦٧﴾

(६८) तिम्रो प्रभुको सौगन्ध ! हामीले उनीहरु तथा शैतानहरुलाई एकत्रित गरी अवश्य नै नरकको चारैतिर घुँडाले टेकेको अवस्थामा उपस्थित गर्नेछौं ।[३]

فَوَرَبِّكَ لَنَحْشُرَنَّهُمْ وَالشَّيَاطِينَ ثُمَّ لَنُحْضِرَنَّهُمْ حَوْلَ جَهَنَّمَ جِثِيًّا ﴿٦٨﴾

---

[१]प्रश्न इन्कारको लागि हो । अर्थात् जब म कुहेर माटोमा मिसिनेछु, त मलाई पुन: कसरी नयाँ रुप प्रदान गरिनेछ ? अर्थात् यस्तो सम्भव छैन ।

[२]अल्लाह तआलाले उत्तर दियो कि जब प्रथम पटक बिना कुनै नमूना हामीले मनुष्यलाई पैदा गऱ्यौं, त पुन: पैदा गर्नु हाम्रो लागि किन कठिन हुनेछ ? प्रथम पटक सृष्टि गर्नु कठिन छ अथवा पुन: त्यसलाई सृष्टि गर्नु ? मनुष्य कति बुद्धिहीन (नासमझ) तथा स्वयंलाई बिर्सनाले त्यसलाई अल्लाहले बिर्सिदिएको छ ।

[३] جثي (बहुवचन) हो, جاث को, जुन جثا يجثو बाट बनेको छ । جاث घुँडामा घोप्टो परिहाल्नेवालालाई भन्दछन् तथा यो स्थितिवाचक हो । अत: हामी पुन: उनीहरुलाई मात्र होइन बरु ती शैतानहरुलाई पनि जीवित गर्नेछौं, जसले उनीहरुलाई विचलित गरेका थिए अथवा जसका उनीहरुले पूजा गर्दथे । अनि हामी ती सबैलाई यस अवस्थामा नरकका निकट एकत्रित गर्नेछौं कि यो महशर (एकत्रित हुने स्थल) को भयानकता हिसाब-किताबको भयले घुँडामा टेकी बसेका हुनेछन् । हदीस कुद्सीमा छ अल्लाह तआला भन्दछ,"आदमका सन्तान मलाई झुठ्लाउँछ यद्यपि त्यो यसको योग्य छैन । आदमको सन्तान मलाई दुख पुऱ्याउँछ यद्यपि यो त्यसलाई शोभा दिँदैन । त्यसको मलाई झुठ्लाउनु यो हो कि त्यो मेरो विषयमा भन्दछ कि अल्लाह कदापि यसप्रकार हामीलाई पुन: जीवित गर्नेछैन जुनप्रकार उनीहरुलाई पैदा गऱ्यो यद्यपि मेरो लागि प्रथम पटक पैदा गर्नु दोस्रो पटक पैदा गर्नुभन्दा धेरै सरल छैन (अर्थात यदि कठिन छ भने प्रथम पटक पैदा गर्नु छ न कि दोस्रो पटक) तथा त्यसको मलाई दुख पुऱ्याउनु यो छ कि त्यो भन्दछ कि मेरो सन्तान छ, यद्यपि म मात्र एक्लो छु, मेरो कोही साथी छैन, न मैले कसैलाई प्रजनन् गरे न मलाई कसैले जन्म दियो तथा मेरो कोही साझेदार (अंशियार) छैन ।" (सहीह बुख़ारी तफ़सीर सूर: इख़्लास)

ثُمَّ لَنَنزِعَنَّ مِن كُلِّ شِيعَةٍ أَيُّهُمْ أَشَدُّ عَلَى الرَّحْمَٰنِ عِتِيًّا ﴿٦٩﴾

(६९) अनि प्रत्येक समूहबाट हामीले अवश्य नै उनीहरुलाई पृथक गरी उभ्याउने छौं जो अल्लाह दयालुसित निकै अट्टेरीपना गर्दै हिंड्थे ।[1]

ثُمَّ لَنَحْنُ أَعْلَمُ بِالَّذِينَ هُمْ أَوْلَىٰ بِهَا صِلِيًّا ﴿٧٠﴾

(७०) अनि हामी उनीहरुलाई पनि राम्ररी जान्दछौं जो नरक्मा प्रवेशका लागि अधिक योग्य छन् ।[2]

وَإِن مِّنكُمْ إِلَّا وَارِدُهَا ۚ كَانَ عَلَىٰ رَبِّكَ حَتْمًا مَّقْضِيًّا ﴿٧١﴾

(७१) तथा तिमीमध्येबाट प्रत्येक त्यहाँ अवश्य उपस्थित हुनेवाला छ, यो तिम्रो प्रभुको जिम्मामा निश्चित निर्णय हो ।

ثُمَّ نُنَجِّي الَّذِينَ اتَّقَوا وَّنَذَرُ الظَّالِمِينَ فِيهَا جِثِيًّا ﴿٧٢﴾

(७२) अनि हामी परहेजगारहरुलाई बचाउनेछौं तथा अवज्ञा गर्नेहरुलाई त्यसैमा घुँडा टेकि लडेको अवस्थामा छाडिदिनेछौं ।[3]



[1] عتيا पनि عتا يعتو बाट عات को बहुवचन हो । यसको अर्थ हो अत्याधिक दुष्ट तथा अत्याचारी । अर्थ यो हो कि प्रत्येक विचलनमा परेको गुटका प्रमुख उद्दण्ड एवं नेताहरुलाई हामीले अलग पार्नेछौं तथा उनीहरुलाई एकत्रित गरी नरक्मा फ्याँकिदिन्छौं, किनकि यी नेता अन्य नरक्मा जानेवालाहरुको तुलनामा दण्ड तथा यातनाका अधिकारी छन् जस्तो कि अर्को आयतमा आउनेवाला छ ।

[2] صليا सुनिएको धातु हो صلى तथा يصلى को, अर्थ प्रवेश गर्नु हो । अर्थात् नरक्मा प्रवेश गर्ने तथा त्यसमा भस्म हुनेको को सबभन्दा धेरै अधिकारी छन्, हामी उनीहरुलाई राम्ररी जान्दछौं ।

[3]यसको व्याख्या सहीह हदीसहरुमा यसप्रकार वर्णित छ कि नरकमाथि एउटा पुल बनाइनेछ, जसमाथिबाट प्रत्येक ईमानवाला तथा काफ़िरलाई गुज्रनु पर्नेछ । ईमानवाला आ-आफ्ना कर्मका अनुसार छिटो अथवा ढिलो गुज्रिहाल्ने छन्, केही त आँखा चिम्लँदा, केही बिजुली तथा वायुको जस्तै, केही पंक्षीहरुको जस्तै तथा केही राम्रा घोडा सवारीहरुको जस्तै पार गर्नेछन्, यसैप्रकार केही पूर्ण सुरक्षित, केही घायल भएपनि पुल पार गर्नेछन्, केही नरक्मा खसिहाल्नेछन् जसलाई पछि सिफारिसद्वारा निकालिनेछ । परन्तु काफ़िर त्यस पुललाई पार गर्न सफल हुने छैनन् तथा नरक्मा खसिहाल्नेछन् । यसको समर्थन त्यस हदीसबाट पनि हुन्छ जसमा चर्चित छ कि "जसका तीन सन्तानहरु बाल्यवस्थामा मरेका हुनेछन् त्यसलाई अग्निले छुने छैन, परन्तु प्रतिज्ञाको प्राप्तिको लागि" (सहीह बुख़ारी किताबुल

(७३) तथा जब उनका समक्ष हाम्रा ज्योतिर्मय आयतहरु पढिन्छन् त काफिर मुसलमानहरुसित भन्दछन् (भन) हामी तिमी दुबै समूहहरुमा कसको मान धेरै छ तथा कसको बैठक (सभा) शोभनीय छ ?[1]

وَاِذَا تُتۡلٰى عَلَيۡهِمۡ اٰيٰتُنَا بَيِّنٰتٍ قَالَ الَّذِيۡنَ كَفَرُوۡا لِلَّذِيۡنَ اٰمَنُوۡۤا ۙ اَىُّ الۡفَرِيۡقَيۡنِ خَيۡرٌ مَّقَامًا وَّاَحۡسَنُ نَدِيًّا ۝٧٣

(७४) तथा हामी त उनीहरुभन्दा पूर्व धेरै समुदायहरुलाई ध्वस्त गरिसकेका छौं, जो संसाधन तथा मान सम्मानमा[2] यिनीहरुभन्दा कैयौं गुना अधिक थिए ।

وَكَمۡ اَهۡلَكۡنَا قَبۡلَهُمۡ مِّنۡ قَرۡنٍ هُمۡ اَحۡسَنُ اَثَاثًا وَّرِءۡيًا ۝٧٤

(७५) भनिदिनुस् कि जो मार्ग-विचलनमा हुन्छ, अल्लाह दयालु त्यसलाई धेरै लामो अवसर दिन्छ, यहाँसम्मकि उनीहरु ती वस्तुहरुलाई हेरून् जसको वाचा गरिन्छन्, अर्थात प्रकोप अथवा केयामतलाई, त्यस समय उनीहरुलाई

قُلۡ مَنۡ كَانَ فِى الضَّلٰلَةِ فَلۡيَمۡدُدۡ لَهُ الرَّحۡمٰنُ مَدًّا ۚ حَتّٰۤى اِذَا رَاَوۡا مَا يُوۡعَدُوۡنَ اِمَّا الۡعَذَابَ وَاِمَّا السَّاعَةَ ؕ فَسَيَعۡلَمُوۡنَ مَنۡ هُوَ

जनायेज तथा सहीह मुस्लिम किताबुल बिर्रे) यो प्रतिज्ञा त्यही हो जसलाई यस आयतमा حتما مقضيا (निश्चित निर्णय) भनिएको छ । अर्थात् यो घटित हुनु नरकमा पुलबाट गुज्रनुसम्म मात्र सीमित हुनेछ । (विस्तृत जानकारीको लागि हेर्नुस् इब्ने कसीर तथा ऐसरुत्तफ़ासीर)

[1]अर्थात् कुरआनको आमन्त्रणको तुलना यी मक्काका काफ़िर, निर्धन मुसलमान तथा कुरैशको धनवानहरु तथा उनका सभा एवं घरहरुसित गर्दछन् कि मुसलमानहरुमा अम्मार बिन यासिर, बेलाल, सुहैब जस्ता निर्धन मानिसहरु छन् । उनका परामर्श गृह अर्कम (सहाबाका नाम) का घर नै रहे । जबकि काफ़िरहरुमा अबूजहल, नजर बिन हारिस उतबा, शैबा जस्ता धनवान छन् तथा उनका भव्य भवन एवं घर छन्, उनका सभाको स्थान दारून्नदवह अत्याधिक भव्य छ ।

[2]अल्लाह तआलाले आदेश गर्‍यो, संसारका यी कुराहरु यस्ता छैनन् कि उनीमाथि गर्व गरियोस्, अथवा उनलाई देखेर सत्य तथा असत्यमध्ये निर्णय गरियोस् । यी कुराहरु तिमीभन्दा पूर्वका समुदायसित थिए, परन्तु सत्यलाई झुठ्लाउनुका कारण उनलाई नाश गरियो । दुनियाँका यी धन तथा साधन उनीहरुलाई अल्लाहका प्रकोपबाट बचाउन सकेनन् ।

شَرٌّ مَّكَانًا وَّاَضْعَفُ جُنْدًا ﴿٧٥﴾

राम्ररी ज्ञात भइहाल्नेछ कि को नराम्रो पदवाला छ तथा कसको जत्था (समूह) कमजोर छ ।[१]

وَيَزِيْدُ اللّٰهُ الَّذِيْنَ اهْتَدَوْا هُدًى ؕ وَالْبٰقِيٰتُ الصّٰلِحٰتُ خَيْرٌ عِنْدَ رَبِّكَ ثَوَابًا وَّخَيْرٌ مَّرَدًّا ﴿٧٦﴾

(७६) तथा मार्गदर्शन प्राप्त गरिएका मानिसहरुको मार्गदर्शनमा अल्लाह भन् बृद्धि गर्दछ ।[२] तथा शेष रहनेवाला पुण्य तिम्रो प्रभुका निकट प्रतिफलका अनुरुप तथा परिणामका अनुरुप अति उत्तम छन् ।[३]

اَفَرَءَيْتَ الَّذِيْ كَفَرَ بِاٰيٰتِنَا وَقَالَ لَاُوْتَيَنَّ مَالًا وَّوَلَدًا ﴿٧٧﴾

(७७) के तिमीले त्यसलाई पनि देख्यौ जसले हाम्रा आयतहरुमा अविश्वास गऱ्यो तथा भन्यो कि मलाई त धन तथा सन्तान त अवश्य नै दिइनेछ ।

اَطَّلَعَ الْغَيْبَ اَمِ اتَّخَذَ عِنْدَ الرَّحْمٰنِ عَهْدًا ﴿٧٨﴾

(७८) के त्यो परोक्षको ज्ञान राख्दछ अथवा अल्लाहसित कुनै वचन लिइसकेको छ ?

كَلَّا ؕ سَنَكْتُبُ مَا يَقُوْلُ وَنَمُدُّ لَهٗ مِنَ الْعَذَابِ مَدًّا ﴿٧٩﴾

(७९) कदापि होइन यो जे-जति भनिराखेको छ, हामी त्यसलाई अवश्य लेख्नेछौं, तथा त्यसका लागि यातना बढाउँदै जानेछौं ।

---

[१]यसका अतिरिक्त यी वस्तुहरु कुमार्गी तथा काफिरहरु (अधर्मीहरु) लाई अवसर प्रदान गर्नको निम्ति पनि प्राप्त हुन्छ, यसकारण यसको कुनै प्रमाणिकता छैन । मूलरुपले राम्रो तथा नराम्रो बारे त्यसवेला थाहा हुनेछ जब कर्म गर्नुको अवसर समाप्त हुनेछ तथा अल्लाहको प्रकोपले उनीहरुलाई आई घेर्नेछ अथवा क़्यामत आउनेछ । तर त्यसबेलाको ज्ञान कुनै लाभ पुऱ्याउने छैन किनभने त्यहाँ क्षतिपूर्ति तथा सुधार गर्नुको कुनै मार्ग हुनेछैन ।

[२]यसमा एउटा अन्य नियमको वर्णन छ कि जुनप्रकारले कुरआनबाट, जसका हृदयहरुमा कुफ्र तथा मिश्रणवादको रोग छ, उनको दुर्भाग्य तथा कुमार्गतामा अधिकता हुन्छ, त्यसैप्रकार ईमानवालाहरुका हृदयमा ईमान तथा मार्गदर्शनमा दृढता आउँछ ।

[३]यसमा निर्धन मुसलमानहरुलाई सान्त्वना दिइराखिएको छ कि काफिर तथा मूर्तिपूजक जुन धन तथा साधनमा गर्व गर्दछन्, ती सबै विनाशशील छन् तथा तिमी जुन पुण्यका काम गर्दछौ, ती स्थाई रहनेवाला छन्, जसका पुण्य तथा प्रतिफल तिमीलाई तिम्रा प्रभुका सदनमा प्राप्त हुनेछन् तथा त्यसको उत्तम बदला तथा लाभ तिमीतिर फर्कने छ ।

وَّنَرِثُهٗ مَا يَقُوْلُ وَيَاْتِيْنَا فَرْدًا ﴿٨٠﴾

(८०) तथा यो जुन वस्तुहरुको विषयमा भनिराखेको छ, त्यसलाई हामीले उसको पश्चात लिनेछौं । तथा त्यो एक्लै हाम्रो समक्ष उपस्थित हुनेछ ।[1]

وَاتَّخَذُوْا مِنْ دُوْنِ اللّٰهِ اٰلِهَةً لِّيَكُوْنُوْا لَهُمْ عِزًّا ﴿٨١﴾

(८१) उनीहरुले अल्लाहका अतिरिक्त अन्य देवता बनाएका छन् ताकि उनीहरु उनका लागि शक्तिका कारण बनून् ।

كَلَّا ؕ سَيَكْفُرُوْنَ بِعِبَادَتِهِمْ وَيَكُوْنُوْنَ عَلَيْهِمْ ضِدًّا ﴿٨٢﴾

(८२) तर यस्तो कहिल्यै हुनेछैन, उनी त उनीहरुका पूजाबाट इन्कार गर्नेछन्, तथा उनका विरोधी बन्नेछन् ।[2]

---

[1]यी आयतहरु अवतरित हुनका कारणमा भनिएको छ कि आदरणीय अम्र बिन अल-आसका पिता आस बिन वायल, जो इस्लामको घोर विरोधी थियो । त्यसमाथि आदरणीय ख़बाब बिन अरतको ऋण थियो, जो कामीको काम गर्थ्यो । आदरणीय ख़बाबले त्यसबाट आफ्नो धनको माँग गरे त उसले भन्यो कि जबसम्म तिमी मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) सँग कुफ्र गर्दैनौ, म तिमीलाई तिम्रो धन दिनेछैन । उनले भने कि यो काम त तिमी मरेर पुन: जीवित भएर आए पनि म गर्नेछैन । उसले भन्यो कि त्यसपछि यस्तै नै ठीक छ, जब मलाई मर्नु पश्चात पुन: उठाइनेछ तथा त्यहाँ पनि मलाई धन तथा सन्तान प्रदान गरिनेछ त्यतिखेर म त्यहाँ यो धन चुक्ता गर्नेछु । (सहीह बुख़ारी, किताबुल बुयूअ, बाब ज़िकुल कैने वल हद्दाद, व तफ़सीर सूर: मरियम, सहीह मुस्लिम सिफ़तुल कियाम:, बाब सोवालिल यहूद अनिर् रुह) अल्लाह तआलाको हुकूम भयो कि यो जुन दावी गरिराखेको छ, के उसित परोक्षको ज्ञान छ कि त्यहाँ पनि यससित धन तथा सन्तान हुनेछन् ? अथवा अल्लाहसित उसको कुनै सन्धि छ ? यस्तो कदापि छैन । यस्तो केवल मनगढन्त तथा अल्लाहको उपहास गर्नु हो, यो जुन धन तथा सन्तानको कुरा गरिराखेको छ, उसको स्वामी त हामी हौं अर्थात् मर्नुका उपरान्त नै उनीबाट उसको सम्बन्ध समाप्त हुनेछ तथा हाम्रा सदनमा यो एक्लै आउनेछ, न धन साथ हुनेछ न सन्तान एवं न कुनै अन्य जत्था । परन्तु यातना हुनेछ, जुन उसका लागि तथा उजस्ता अन्यका लागि बढाउँदै जानेछौं ।

[2] عزا को अर्थ हो कि यी देवता उनका लागि सम्मानका कारण तथा सहायक हुनेछन् तथा ضدا को अर्थ हो, शत्रु, झुठ्लाउनेवाला तथा उनका विरूद्ध अरुहरुको सहायता गर्नेवाला । अर्थात् देवता उनका विचारका विपरीत उनका पक्षधर

(८३) के तिमीले देखेनौं कि हामी काफिरहरुको पासमा शैतानहरुलाई पठाउँछौं, जो उनीहरुलाई निकै उक्साउँछन् ।[1]

أَلَمْ تَرَ أَنَّآ أَرْسَلْنَا ٱلشَّيَٰطِينَ عَلَى ٱلْكَٰفِرِينَ تَؤُزُّهُمْ أَزًّا ﴿٨٣﴾

(८४) तिमी उनीहरुको विषयमा शीघ्रता नगर, हामी त स्वयं नै यिनका समयका गणना गरिराखेका छौं ।[2]

فَلَا تَعْجَلْ عَلَيْهِمْ ۖ إِنَّمَا نَعُدُّ لَهُمْ عَدًّا ﴿٨٤﴾

(८५) जुन दिन हामीले जितेन्द्रहरु (परहेजगारहरु) लाई अल्लाह दयालुका अतिथि बनाएर एकत्रित गर्नेछौं ।

يَوْمَ نَحْشُرُ ٱلْمُتَّقِينَ إِلَى ٱلرَّحْمَٰنِ وَفْدًا ﴿٨٥﴾

(८६) तथा पापीहरुलाई (अत्याधिक तिर्खाको अवस्थामा) नरकतिर धपाइ लग्नेछौं ।[3]

وَنَسُوقُ ٱلْمُجْرِمِينَ إِلَىٰ جَهَنَّمَ وِرْدًا ﴿٨٦﴾

(८७) कसैलाई सिफारिश (अभिस्तावना) को अधिकार हुनेछैन तिनीहरुबाहेक जसले

لَّا يَمْلِكُونَ ٱلشَّفَٰعَةَ إِلَّا مَنِ ٱتَّخَذَ

हुनुको सट्टा उनका शत्रु, उनलाई झुठ्लाउनेवाला तथा उनका विरुद्ध हुनेछन् ।

[1]अर्थात् विचलित पार्दछन् तथा अवज्ञातिर तानेर लग्छन् ।

[2]तर जब त्यो अवसर समाप्त भइहाल्नेछ, त अल्लाहका प्रकोपका भोगी बन्नेछन् । तपाईंलाई हतार गर्नुको आवश्यकता छैन ।

[3] وفـد बहुवचन हो وافد को जस्तै ركب बहुवचन हो راكب को अर्थ यो हो कि उनीहरुलाई ऊँट, तथा घोडाहरुमा सवार गराई अति सम्मान तथा आदरका साथ स्वर्गतिर लगिनेछ । وردا को अर्थ हो तिर्खाएका । यिनका विपरीत अपराधीहरुलाई भोको र तिर्खाएको अवस्थामा नरकमा धपाइनेछ ।

عِندَ الرَّحْمَٰنِ عَهْدًا ﴿٨٧﴾

अल्लाह तआ़लातिरबाट कुनै वचन लिएका छन् ।[1]

وَقَالُوا اتَّخَذَ الرَّحْمَٰنُ وَلَدًا ﴿٨٨﴾

(८८) तथा उनको कथन त यो छ कि अल्लाह दयालुले पनि सन्तान बनाएको छ ।

لَّقَدْ جِئْتُمْ شَيْئًا إِدًّا ﴿٨٩﴾

(८९) निःसन्देह तिमी निकै नराम्रो तथा ठूलो कुरो रचेर ल्याएका छौ ।

تَكَادُ السَّمَاوَاتُ يَتَفَطَّرْنَ مِنْهُ وَتَنشَقُّ الْأَرْضُ وَتَخِرُّ الْجِبَالُ هَدًّا ﴿٩٠﴾

(९०) निकट छ कि यस कथनको कारण आकाश फाटिहालून् तथा धर्तीमा चिरा परिहालोस् तथा पर्वत टुक्रा-टुक्रा भईहालून् ।

أَن دَعَوْا لِلرَّحْمَٰنِ وَلَدًا ﴿٩١﴾

(९१) कि उनीहरु दयालुका सन्तान सिद्ध गर्न बसेका छन् ।[2]

وَمَا يَنبَغِي لِلرَّحْمَٰنِ أَن يَتَّخِذَ وَلَدًا ﴿٩٢﴾

(९२) तथा दयालुलाई यो शोभा छैन कि त्यो सन्तान राखोस् ।

إِن كُلُّ مَن فِي السَّمَاوَاتِ وَالْأَرْضِ إِلَّا آتِي الرَّحْمَٰنِ عَبْدًا ﴿٩٣﴾

(९३) आकाशहरु तथा धर्तीमा जे-जति पनि छन् सबै अल्लाहका दास बनेर नै आउनेवाला छन् ।[3]

لَّقَدْ أَحْصَاهُمْ وَعَدَّهُمْ عَدًّا ﴿٩٤﴾

(९४) ती सबैलाई उसले घेरेको छ तथा सबैको

[1]वचन एवं कथन (सन्धि) को अर्थ ईमान तथा अल्लाहको भय हो । अर्थात् ईमानवाला तथा अल्लाहसित भय राख्ने मध्येबाट जसलाई अल्लाह सिफारिश गर्न आज्ञा दिन्छ, तिनै सिफारिश गर्नेछन्, उनका अतिरिक्त कसैलाई सिफारिश गर्नुको आज्ञा पनि हुनेछैन ।

[2]إدا को अर्थ भयानक कुरा तथा داهية (ठूलो कुरो तथा ठूलै कठिनाई) का हुन् । यो विषय पहिले पनि गुज्रिसकेको छ कि अल्लाहको सन्तान भन्नु यति ठूलो अपराध हो कि यसबाट आकाश तथा धर्ती फाट्न सक्छन् तथा पर्वत टुक्रा-टुक्रा हुनसक्छन् ।

[3]जब सबै अल्लाहका दास तथा त्यसका भक्त हुन् त फेरि उसलाई सन्तानको के आवश्यकता छ ? तथा त्यो योग्य पनि छैन ।

पूर्णतः गणना पनि गरिसकेको छ ।[1]

(९५) यी सबै केयामतका दिन एक्लो उसको समक्ष उपस्थित हुनेवाला छन् ।[2]

وَكُلُّهُمْ آتِيهِ يَوْمَ الْقِيَامَةِ فَرْدًا ﴿٩٥﴾

(९६) निःसन्देह जो ईमान ल्याएका छन् तथा जसले सदाचार गरेका छन्, उनका लागि अल्लाह दयालु प्रेम उत्पन्न गरिदिनेछ ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ سَيَجْعَلُ لَهُمُ الرَّحْمَٰنُ وُدًّا ﴿٩٦﴾

(९७) हामीले (कुर्आनलाई) तिम्रो भाषामा अति सजिलो बनाइदिएका छौं[4] ताकि तिमी त्यसद्वारा

فَإِنَّمَا يَسَّرْنَاهُ بِلِسَانِكَ لِتُبَشِّرَ بِهِ

[1]अर्थात् आदमदेखि लिएर केयामतको बिहानीसम्म जति पनि मानव तथा दानव छन्, सबैको उसले गणना गरिसकेको छ, सबै उसको अधीन तथा पकडमा छन्, कोही त्यसबाट लुकेर बस्न सक्दैन ।

[2]अर्थात् कोही कसैको सहायक हुनेछैन । न धन नै त्यहाँ कुनै काम आउने छ ।

﴿ يَوْمَ لَا يَنفَعُ مَالٌ وَلَا بَنُونَ ﴾

"त्यस दिन न धन लाभ दिनेछ, न पुत्र ।" (सूरः अल-शुअरा-८८)

प्रत्येक व्यक्तिलाई एक्लो आ-आफ्नो हिसाब दिनुपर्नेछ तथा जसका विषयमा मुनष्य संसारमा यो ठान्दछ कि यिनी मेरा पक्षधर तथा सहायक हुनेछन्, त्यहाँ सबै गुमिनेछन् । कोही कसैको सहायताका लागि उपस्थित हुनेछैन ।

[3]अर्थात् संसारमा मानिसहरुका हृदयमा त्यसका पुण्य तथा पवित्रताका कारण प्रेम उत्पन्न गरिदिनेछ । जस्तो कि हदीसमा भनिएको छ, "जब अल्लाह तआ़ला कुनै (पुण्य गर्नेवाला) भक्तलाई आफ्नो प्रिय बनाउँदछ त अल्लाह जिब्रीललाई भन्दछ, म अमूक भक्तसित प्रेम गर्दछु, तिमी पनि त्यससित प्रेम गर, त जिब्रील पनि उससित प्रेम गर्न प्रारम्भ गरिदिन्छ । त्यसपछि जिब्रील आकाशमा उद्घोषणा गर्दछन् कि अल्लाह तआ़ला अमूक व्यक्तिसँग प्रेम गर्दछ, त सबै आकाशवाला पनि यससित प्रेम गर्न थाल्दछन्, अनि धर्तीमा उसको लागि सम्मान तथा आदर सुनिश्चित गरिन्छ ।" (सहीह बुख़ारी किताबुल अदब बाबुल मक़्त मिनल्लाह ताअ़ला)

[4]कुर्आनलाई सरल गर्नुको अर्थ यस भाषामा अवतरित गर्न जसलाई पैग़म्बर जान्दथ्यो अर्थात् अरबी भाषामा । अनि यसको विषय खुला भएको, स्पष्ट एवं सफा हुनु हो ।

الْمُتَّقِينَ وَتُنْذِرَ بِهِ قَوْمًا لُّدًّا ﴿٩٧﴾

परहेज़गारहरू (सदाचारीहरू) लाई शुभ-सूचना देउ तथा झगडालु मानिसहरूलाई[1] सतर्क गरिदेउ ।

وَكَمْ أَهْلَكْنَا قَبْلَهُمْ مِّنْ قَرْنٍ هَلْ تُحِسُّ مِنْهُمْ مِّنْ أَحَدٍ أَوْ تَسْمَعُ لَهُمْ رِكْزًا ﴿٩٨﴾

(९८) तथा हामीले यसभन्दा पूर्व धेरै समूह ध्वस्त गरिदिएका छौं, के उनीहरूमध्ये एउटाको पनि चाल पाउँछौ अथवा उनको आवाजको मसिनो स्वर पनि तिम्रो कानमा पर्दछ ।[2]

## سُورَةُ طٰهٰ

## सूरतु ताहा-२०

सूर: ताहा* मक्कामा अवतरित भएको तथा यसका १३५ आयत तथा ८ रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्त दयालु तथा कृपालु छ ।

طٰهٰ ﴿١﴾

(१) ता.हा.

مَآ أَنْزَلْنَا عَلَيْكَ الْقُرْاٰنَ لِتَشْقٰٓى ﴿٢﴾

(२) हामीले यस कुर्आनलाई तिमीमाथि यसकारण अवतरित गरेनौं कि के तिमी अप्ठ्यारोमा पर ।[3]

---

[1] لدّ बहुवचन हो ألدّ को जसको अर्थ झगडालु हो । तात्पर्य काफ़िर तथा मूर्तिपूजक हुन् ।

[2] संवेदनको अर्थ हो الإدراك بـالحس ज्ञानेन्द्रियहरूद्वारा ज्ञान गर्नु । अर्थात् के तिमी उनलाई आँखाले देख्न सक्छौ अथवा हातले छुन सक्छौ ? प्रश्न इन्कारको लागि हो । अर्थात् उनको अस्तित्व नै संसारमा छैन कि तिमी उनलाई देख्न अथवा छुन सक । ركز मसिनो स्वरलाई भन्दछन् अथवा उनको मसिनो स्वर नै पनि तिमीलाई कहींबाट सुनियोस् ।

*आदरणीय उमरबाट इस्लाम धर्म स्वीकार गर्नुका विभिन्न कारण वर्णन गरिएका छन् । केही ऐतिहासिक कथनहरूमा आफ्नी दिदी तथा भिनाजूको घरमा सूर: ताहा सुन्न तथा त्यसबाट प्रभावित हुनु पनि वर्णित छ । (फ़तहुल क़दीर)

[3] यसको अर्थ यो हो कि हामीले कुरआ़नलाई यसकारण अवतरित गरेनौं कि तिमी उनीहरूद्वारा कुफ्र (अविश्वास) मा एवं उनीबाट ईमान नल्याउने कुरामा चिन्तित भई आफूलाई दुखमा पार, बरू हामीले त कुरआ़नाई शिक्षा तथा चेतावनीको लागि उतारेका छौं ताकि प्रत्येक मनुष्यका हृदयमा हाम्रो एकेश्वरवादको जुन

| | |
|---|---|
| (३) बरु त्यसको शिक्षाको निम्ति जो अल्लाहसँग तर्सन्छ । | إِلَّا تَذْكِرَةً لِّمَن يَخْشَىٰ ۝ |
| (४) यसको अवतरण त्यसको तर्फबाट जसले धर्तीलाई तथा उच्च आकाशहरूलाई सृष्टि गरेको छ । | تَنزِيلًا مِّمَّنْ خَلَقَ الْأَرْضَ وَالسَّمَاوَاتِ الْعُلَى ۝ |
| (५) जो दयालु छ, अर्श (सिंहासन) मा स्थिर छ ।[1] | الرَّحْمَٰنُ عَلَى الْعَرْشِ اسْتَوَىٰ ۝ |
| (६) जसको स्वामित्व आकाशहरू तथा धर्ती एवं यिनका मध्ये तथा धर्तीको सतहदेखि मुनि प्रत्येक वस्तुमाथि छ ।[2] | لَهُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ وَمَا بَيْنَهُمَا وَمَا تَحْتَ الثَّرَىٰ ۝ |
| (७) यदि तिमी पुकारले भन्छौ त त्यो प्रत्येक गुप्त, बरु गुप्त भन्दा गुप्त कुरोलाई राम्ररी जान्दछ ।[3] | وَإِن تَجْهَرْ بِالْقَوْلِ فَإِنَّهُ يَعْلَمُ السِّرَّ وَأَخْفَى ۝ |
| (८) त्यही अल्लाह हो जसको अतिरिक्त कोही | اللَّهُ لَا إِلَٰهَ إِلَّا هُوَ |

भावना लुकेको छ, स्पष्ट तथा प्रकट होस् । अत: यहाँ شقاء खेद एवं थकानको अर्थमा छ अर्थात् दुख एवं थकावट ।

[1]विना कुनै सीमा निर्धारण तथा अवस्थाको वर्णन, जुनप्रकार उसको महिमाको योग्य छ अर्थात् अल्लाह तआला अर्शमा स्थिर छ, तर कुन प्रकार तथा कसरी ? यसबारे कोही पनि जान्दैन ।

[2] الثرى को अर्थ धर्तीको सबभन्दा तल्लो तह अर्थात पाताल ।

[3]अर्थात् अल्लाहको स्मरण अथवा उसित प्रार्थना उच्च स्वरमा गर्नुको आवश्यकता छैन, यसकारण कि त्यो त लुकेको तथा अत्यन्त गोप्य कुरोलाई पनि जान्दछ अथवा أخفى को अर्थ हो कि अल्लाह त ती कुराहरूलाई पनि जान्दछ जसलाई उसले भाग्यमा लेखिदिएको छ, तर अझैसम्म मानिसहरूबाट लुकाएको छ । अर्थात् केयामतसम्म घटित हुने घटनाहरूको उसलाई ज्ञान छ ।

لَهُ الْأَسْمَآءُ الْحُسْنٰى ⑧

सत्य पूज्य छैन, उत्तम नाम उसैका छन्।[1]

وَهَلْ اَتٰىكَ حَدِيْثُ مُوْسٰى ⑨

(९) के तिमीलाई मूसाको घटना पनि ज्ञात छ ?

اِذْ رَاٰ نَارًا فَقَالَ لِاَهْلِهِ امْكُثُوْٓا اِنِّيْٓ اٰنَسْتُ نَارًا لَّعَلِّيْٓ اٰتِيْكُمْ مِّنْهَا بِقَبَسٍ اَوْ اَجِدُ عَلَى النَّارِ هُدًى ⑩

(१०) जबकि उसले आगो देखेर आफ्ना परिवारवालाहरूसित भन्यो कि एकछिन पर्ख मैले आगो देखिराखेको छु। अधिक सम्भव छ कि म त्यसको आगोको डल्लो तिम्रो पासमा ल्याऊ अथवा आगोको पासबाट मार्गको सूचना पाउँ।[2]

فَلَمَّآ اَتٰىهَا نُوْدِيَ يٰمُوْسٰى ⑪

(११) जब उनीहरू त्यहाँ पुगे त आकाशवाणी भयो[3] कि हे मूसा !

اِنِّيْٓ اَنَا رَبُّكَ فَاخْلَعْ نَعْلَيْكَ اِنَّكَ

(१२) निःसन्देह म नै तिम्रो प्रभु हूँ, तिमी आफ्नो जुत्ता

---

[1]अर्थात् पूज्य पनि त्यही छ जो उपरोक्त गुणहरूबाट सुशोभित छ तथा उत्तम नाम पनि उसैका छन् जसबाट त्यो पुकारिन्छ। न आराध्य उसका अतिरिक्त कोही अन्य छ तथा न उसका जस्ता नाम पनि कसैका छन्। अतः उसको आज्ञा पालन गरियोस् ताकि मनुष्य जब उसको दरबारमा फर्कि जाँदा त्यहाँ लज्जित नहोस्, वरु उसको कृपाले प्रसन्न तथा प्रफुल्लित होस् तथा उसको प्रसन्नताबाट सफल होस्।

[2]यो त्यस समयको घटना हो जब मूसा मदयनबाट आफ्नी पत्नीलाई लिएर (जुन एक कथनका अनुसार आदरणीय शोएबकी सुपुत्री थिइन्) आफ्नी मातातिर फर्केर गइराखेका थिए, अँध्यारो रात थियो तथा मार्ग पनि अज्ञात थियो। तथा केही व्याख्याकारहरूका अनुसार उनको पत्नीको प्रसवको समय निकट थियो तथा उनलाई गर्मीको आवश्यकता थियो अथवा शीतको कारण गर्मीको आवश्यकता परेको हुनसक्छ। यतिखेरै उनलाई टाढाबाट आगोका ज्वाला प्रज्वलित भईराखेका देखिए। घरवालाहरूसित अर्थात पत्नीसित (अथवा केही व्याख्याकार भन्दछन् कि सेवक तथा बालक पनि थियो यसकारण बहुवचन शब्दको प्रयोग गरे) भने तिमी यहीं पर्ख ! सम्भवतः म आगोको कुनै टुकडा (ज्वाला) त्यहाँबाट सँगै ल्याऊ अथवा कमसेकम त्यहाँबाट मार्गको संकेत मिलोस्।

[3]मूसा जब अग्नि भएको स्थानमा पुगे त त्यहाँ एउटा वृक्षबाट (जस्तो कि सूरः क़सस-३० मा विस्तारपूर्वक छ) आवाज आयो।

بِالْوَادِ الْمُقَدَّسِ طُوًى ﴿١٢﴾

फुकाइदेउ[1] किनभने तिमी पवित्र मैदान 'तोवा'[2] मा छौ ।

وَأَنَا اخْتَرْتُكَ فَاسْتَمِعْ لِمَا يُوحَىٰ ﴿١٣﴾

(१३) तथा मैले तिमीलाई मनोनित गरिहालेको छु,[3] अब जुन प्रकाशना (वह्य) गरिनेछ त्यसलाई ध्यानपूर्वक सुन ।

إِنَّنِي أَنَا اللَّهُ لَا إِلَٰهَ إِلَّا أَنَا فَاعْبُدْنِي وَأَقِمِ الصَّلَاةَ لِذِكْرِي ﴿١٤﴾

(१४) निःसन्देह म नै अल्लाह हुँ, मेरो अतिरिक्त इबादत (पूजा) योग्य अन्य कोही छैन, यसकारण तिमी मेरै इबादत गर ।[4] तथा मेरो स्मरणका निम्ति नमाज़को स्थापना गर ।[5]

---

[1]जुत्ता फुकाउने आदेश यसकारण दियो कि यसमा विनम्रताको प्रदर्शन तथा आदर एवं सम्मानको पक्ष अधिक छ, केही व्याख्याकारहरू भन्दछन् कि ती यस्ता गधाहरुको छालाबाट बनाइएका थिए, जुन रङ्गिएको थिएन । किनभने जनावरको छाला रङ्गे पश्चात नै पवित्र हुन्छ, तर यो कथन सत्य प्रतीत हुँदैन । रङ्गाइ बिना जुत्ता कसरी बन्न सक्दछ ? अथवा घाटी (बेंसी) को पवित्रता त्यसको कारण थियो, जस्तो कि कुरआनका शब्दहरूबाट स्पष्ट छ । तैपनि यसका दुई पक्ष छन् । यो आदेश घाटीको सम्मानको लागि थियो अथवा यसकारण कि घाटीको पवित्रताको प्रभाव बाङ्गो खुट्टा भएको अवस्थामा मूसामा अधिक संचित होस् ।

[2]طوى (तोवा) घाटीको नाम हो, (फ़तहुल क़दीर)

[3]अर्थात् नबूअत एवं रिसालत तथा परस्पर कुरा गर्नको लागि ।

[4]अर्थात् धार्मिक दायित्वमा यो सर्वप्रथम तथा सबभन्दा महत्वपूर्ण आदेश हो जसको दायित्व प्रत्येक मनुष्यमाथि छ । यसको अतिरिक्त जब पूज्य हुनुको अधिकारी पनि त्यही छ भने आराधना (इबादत) को अधिकार पनि केवल उसैको छ ।

[5]इबादत पश्चात नमाज़को विशेषरूपले आदेश दियो । यद्यपि इबादतमा नमाज़ पनि सम्मिलित थियो, ताकि त्यसको त्यो महत्व स्पष्ट होस् जस्तो कि त्यसको छ । لذكري (लेजिकरी) को एउटा अर्थ यो हो कि तिमी मलाई स्मरण गर, यसकारण कि याद गर्नुको विधि इबादत हो र इबादतहरूमा नमाज़लाई विशेष महत्व तथा श्रेष्ठता प्राप्त छ । दोस्रो भावार्थ यो हो कि जहिलपनि म तिमीलाई याद आउँछु नमाज़ पढ अर्थात् यदि कुनै समय आलस्य, भूल अथवा निद्राको प्रभावको कारण यस्तो परिस्थिति उत्पन्न हुन्छ त त्यसबाट निस्कँदा तथा मेरो स्मरण आउनासाथ नमाज़ पढ । जुनप्रकार नबी सल्लल्लाहु अलैहि वसल्लमको वाणी छ :

إِنَّ السَّاعَةَ آتِيَةٌ أَكَادُ أُخْفِيهَا لِتُجْزَىٰ كُلُّ نَفْسٍ بِمَا تَسْعَىٰ ﴿١٥﴾

(१५) केयामत अवश्य आउनेछ, जसलाई म गुप्त राख्न चाहन्छु ताकि प्रत्येक व्यक्तिलाई उनले गरेका प्रयासको पर्याप्त प्रतिफल दिइयोस् ।

فَلَا يَصُدَّنَّكَ عَنْهَا مَنْ لَا يُؤْمِنُ بِهَا وَاتَّبَعَ هَوَاهُ فَتَرْدَىٰ ﴿١٦﴾

(१६) त अब यसको विश्वासबाट तिमीलाई यस्तो व्यक्ति रोकि नदेओस्, जो यसमा ईमान (विश्वास) राख्दैन तथा आफ्ना इच्छाहरूको पछि लागेको छ, अन्यथा तिमी नाश भइहाल्नेछौ ।[1]

وَمَا تِلْكَ بِيَمِينِكَ يَا مُوسَىٰ ﴿١٧﴾

(१७) हे मूसा ! तिम्रो दाहिने हातमा के छ ?

قَالَ هِيَ عَصَايَ أَتَوَكَّأُ عَلَيْهَا وَأَهُشُّ بِهَا عَلَىٰ غَنَمِي وَلِيَ فِيهَا مَآرِبُ أُخْرَىٰ ﴿١٨﴾

(१८) उत्तर दिए कि यो मेरो लठ्ठी हो, जसमा म टेक्छु तथा जसबाट म आफ्ना बाखाहरूका निम्ति पातहरू झार्छु । अन्य पनि यसमा मलाई अत्याधिक लाभ छन् ।

قَالَ أَلْقِهَا يَا مُوسَىٰ ﴿١٩﴾

(१९) भन्यो कि हे मूसा ! त्यसलाई (हातबाट) तल गरिदेउ ।

فَأَلْقَاهَا فَإِذَا هِيَ حَيَّةٌ تَسْعَىٰ ﴿٢٠﴾

(२०) झर्ने बित्तिकै सर्प बनेर दगुर्न थाल्यो ।

قَالَ خُذْهَا وَلَا تَخَفْ سَنُعِيدُهَا سِيرَتَهَا الْأُولَىٰ ﴿٢١﴾

(२१) भन्यो कि निर्भय भई नतर्सी त्यसलाई समात, हामीले त्यसलाई त्यसै पूर्ववत रूपमा पुन: ल्याइदिनेछौं ।[2]

"जो बिना नमाज़ सुत्छ, अथवा बिर्सन्छ त त्यसको प्रायश्चित यही छ कि जतिखेर पनि उसलाई याद आउँछ पढिहालोस् ।" (सहीह बुख़ारी किताबुल मवाक़ीत, बाब मन नसेय सलातन फल योसल्ले एज़ा ज़करहा तथा सहीह मुस्लिम किताबुल मसाजिद बाब क़जायिस्सलातिल फ़ाएता)

[1]यसकारण कि आख़िरतमा विश्वास गर्नाले अथवा त्यसको स्मरण एवं ध्यानले विमुख हुनु दुबै कुराहरू विनाशका कारण हुन् ।

[2]यो आदरणीय मूसालाई चमत्कार प्रदान गरियो जुन 'मूसाको छडी' को नामले प्रसिद्ध छ ।

وَاضۡمُمۡ يَدَكَ إِلَىٰ جَنَاحِكَ تَخۡرُجۡ بَيۡضَآءَ مِنۡ غَيۡرِ سُوٓءٍ ءَايَةً أُخۡرَىٰ ﴿٢٢﴾

(२२) तथा आफ्नो हात आफ्नो काखीमा हाल, त त्यो सेतो प्रकाशमान हुँदै निस्कनेछ । परन्तु बिना कुनै दोष तथा रोग[1] यो दोस्रो चमत्कार हो ।

لِنُرِيَكَ مِنۡ ءَايَٰتِنَا ٱلۡكُبۡرَى ﴿٢٣﴾

(२३) यो यसकारण कि हामी तिमीलाई आ-आफ्ना ठूला-ठूला निशानीहरू देखाउन चाहन्छौं ।

ٱذۡهَبۡ إِلَىٰ فِرۡعَوۡنَ إِنَّهُۥ طَغَىٰ ﴿٢٤﴾

(२४) अब तिमी फ़िरऔनतिर जाउ, त्यसले ठूलो विद्रोह मच्चाएको छ ।[2]

قَالَ رَبِّ ٱشۡرَحۡ لِي صَدۡرِي ﴿٢٥﴾

(२५) (मूसाले) भने कि हे मेरा प्रभु ! मेरो छाती मेरो लागि खोलिदेउ ।

وَيَسِّرۡ لِيٓ أَمۡرِي ﴿٢٦﴾

(२६) तथा मेरो कार्यलाई मेरो निम्ति सरल बनाइदेउ ।

وَٱحۡلُلۡ عُقۡدَةً مِّن لِّسَانِي ﴿٢٧﴾

(२७) तथा मेरो जिभ्रोको गाँठो खोलिदेउ ।

يَفۡقَهُواْ قَوۡلِي ﴿٢٨﴾

(२८) ताकि मानिसहरू कुरो राम्ररी बुझ्न सकून् ।

وَٱجۡعَل لِّي وَزِيرًا مِّنۡ أَهۡلِي ﴿٢٩﴾

(२९) तथा मेरो मन्त्री मेरै परिवार मध्येबाट बनाइदेउ ।

---

[1]बिना दोष तथा रोगको अर्थ यो हो कि हात यसप्रकार श्वेत (सेतो) एवं चम्किलो भई निस्कनु, कुनै रोगको कारण होइन जस्तो कि कुष्ट रोगीको छाला सेतो हुन्छ । वरु यो दोस्रो चमत्कार हो, जो हामी तिमीलाई प्रदान गरिराखेका छौं । जस्तो कि अन्य स्थानमा छ ।

﴿ فَذَٰنِكَ بُرۡهَٰنَانِ مِن رَّبِّكَ إِلَىٰ فِرۡعَوۡنَ وَمَلَإِيْهِۦٓ ﴾

"त यी दुई निशानीहरू हुन् तेरो प्रभुको तर्फबाट, फ़िरऔन तथा त्यसका प्रमुखहरूका लागि ।" (सूर: क़सस-३२)

[2]फ़िरऔनको चर्चा यसकारण गऱ्यो कि उसले आदरणीय मूसाको समुदाय इस्राईलको सन्तानलाई दास बनाएर राखेको थियो तथा त्यसमाथि विभिन्न प्रकारका अत्याचार गर्दथ्यो । यसको अतिरिक्त त्यसको क्रुरता एवं अत्याचार अत्याधिक बढिसकेको थियो । यहाँसम्मकि त्यसले दावी गर्न थालेको थियो ﴿أَنَا۠ رَبُّكُمُ ٱلۡأَعۡلَىٰ﴾ (अना रब्बोकूमुल आला) "म तिम्रो उच्चतम प्रभु हूँ ।"

| | |
|---|---|
| (३०) (अर्थात्) मेरो भाइ हारुनलाई । | هٰرُوْنَ اَخِی ﴿۳۰﴾ |
| (३१) तिमी त्यसद्वारा मेरो कम्मरलाई मजबूत गर । | اشْدُدْ بِهٖۤ اَزْرِیْ ﴿۳۱﴾ |
| (३२) तथा त्यसलाई मेरो सहायक नियुक्त गर ।[1] | وَ اَشْرِكْهُ فِیْۤ اَمْرِیْ ﴿۳۲﴾ |
| (३३) ताकि हामी दुबै अत्याधिक तिम्रो प्रशंसाको वर्णन गरौं । | كَیْ نُسَبِّحَكَ كَثِیْرًا ﴿۳۳﴾ |
| (३४) तथा अत्याधिक तिम्रो स्मरण गरौं ।[2] | وَّ نَذْكُرَكَ كَثِیْرًا ﴿۳۴﴾ |
| (३५) निःसन्देह तिमी हामीलाई राम्रो प्रकारले | اِنَّكَ كُنْتَ بِنَا بَصِیْرًا ﴿۳۵﴾ |

[1]भन्दछन् कि मूसाको जब फ़िरऔनको राजभवनमा पालन भइराखेको थियो, तब खजूर अथवा मोतीहरूको सट्टा आगोको डल्लो मुखमा राखेका थिए, जसबाट उनको जिभ्रो पोलिएको थियो तथा त्यसमा केही भक-भकाउनेपना आएको थियो। (इब्ने कसीर) जब अल्लाह तआलाको आदेश भयो कि फिरऔनका पासमा गई मेरो सन्देश पुऱ्याउ, तब आदरणीय मूसाको मनमा दुईटा कुरा आए, एक त यो कि त्यो बडो उग्र एवं घमण्डी राजा छ, बरु प्रभु हुने कुरोको दावी गर्दछ। अर्को यो कि मूसाको हातबाट त्यसको समुदायको एउटा मान्छेको हत्या भएको थियो जसका कारण मूसा अलैहिस्सलामलाई आफ्नो प्राण रक्षाको लागि त्यहाँबाट भाग्नु परेको थियो। अर्थात् एक त फ़िरऔनको ठूलो तथा बलवन्त हुने कुरोको भय तथा दोस्रो आफ्ना हातबाट भएको घटनाको भय तथा तेस्रो अन्य कुरा आफ्ना जिभ्रोमा भक-भकेपना। आदरणीय मूसाले प्रार्थना गरे कि हे अल्लाह ! मेरो हृदय खोलिदेउ ताकि म रिसालतको बोझ उठाउन सकूँ, मेरा कार्यलाई सरल बनाइदेउ अर्थात् जुन कार्य मलाई दिइएको छ, त्यसमा मेरो सहायता गर तथा मेरो जिभ्रोको गाँठो खोलिदेउ जसबाट म फ़िरऔनको समक्ष पूर्ण स्पष्टीकरणका साथ तिम्रो सन्देश पुऱ्याउन सकूँ। त्यसका साथ यो प्रार्थना पनि गरे कि मेरो भाइ हारूनलाई (भनिन्छ कि आयुमा मूसाभन्दा ठूला थिए) सहायकको रुपमा मेरो मन्त्री तथा सहयोगी बनाइदेउ। وزير (वज़िर) शब्द موازر (मवाज़िर) को अर्थमा अर्थात बोझ उठाउनेवाला। जुनप्रकार एक मन्त्री राजाको प्रभारी हुन्छ तथा राज्यको सञ्चालनमा त्यसको सल्लाहकार हुन्छ त्यसैप्रकार हारून मेरो सल्लाहकार एवं साथी होऊन्।

[2]यी प्रार्थनाहरूको कारण भने कि यसप्रकार हामी सन्देश पुऱ्याउनुका साथसाथै तिम्रो पवित्रता एवं तिम्रो सुमिरन (गुणगान्) पनि अधिक गर्न सकौं।

देख्नेवाला छौ ।[1]

قَالَ قَدْ أُوتِيتَ سُؤْلَكَ يَٰمُوسَىٰ ۝٣٦

(३६) (अल्लाह तआलाले) भन्यो हे मूसा ! तिम्रा सबै प्रश्न पूरा गरिए ।[2]

وَلَقَدْ مَنَنَّا عَلَيْكَ مَرَّةً أُخْرَىٰٓ ۝٣٧

(३७) हामीले त तिमीमाथि एकपटक पहिले पनि यसभन्दा पनि ठूलो उपकार गरेका छौं ।[3]

إِذْ أَوْحَيْنَآ إِلَىٰٓ أُمِّكَ مَا يُوحَىٰٓ ۝٣٨

(३८) जबकि हामीले तिम्रो माताको अन्तरात्मामा त्यो अवतरित गऱ्यौं, जसको वर्णन अब गरिँदैछ ।

أَنِ ٱقْذِفِيهِ فِى ٱلتَّابُوتِ فَٱقْذِفِيهِ فِى ٱلْيَمِّ فَلْيُلْقِهِ ٱلْيَمُّ بِٱلسَّاحِلِ

(३९) कि तिमी यसलाई सन्दूकमा बन्द गरी नदीमा छाडिदेउ, अनि नदीले यसलाई तटमा लग्नेछ तथा मेरो एवं स्वयं उसको शत्रु त्यसलाई लिइहाल्नेछ ।[4]

---

[1]अर्थात तिमीलाई हरेक कुरोको ज्ञान छ तथा बाल्यकालमा जसरी तिमीले हामीमाथि उपकार गऱ्यौ, अहिलेपनि आफ्नो उपकारबाट हामीलाई बञ्चित नगर ।

[2]यसबाट ज्ञात हुन्छ कि अल्लाह तआलाले उनको जिभ्रोको भक-भकेपना पनि समाप्त गरिदिएको होला । यसकारण यो भन्नु उचित हुने छैन कि मूसाले पूरा भक-भकेपना समाप्त गर्नेको निम्ति प्रार्थना गरेको थिएन, यसकारण केही शेष रहेको थियो । बाँकी शेष यो रहयो फिरऔनको यो भन्नु ।

﴿وَلَا يَكَادُ يُبِينُ﴾

"यो त स्पष्ट बोल्न पनि सक्दैन ।" (सूर: अल-जुख़रूफ़-५२)

यो उनको अवहेलना तथा भूतकालको अवस्थाको आधारमा छ । (ऐसरूत्तफ़ासीर)

[3]प्रार्थनालाई स्वीकार गर्नुको शुभ-सूचनाका साथ, अत्याधिक सान्त्वना तथा साहसको लागि अल्लाह तआला बाल्यकालका त्यस उपकारको वर्णन गरिराखेको छ जब मूसाकी माताले हत्याको भयले अल्लाहको आदेशबाट (अर्थात दिव्य वाक्य) द्वारा उनलाई जब उनी नवजात शिशु थिए, सन्दूकमा राखि नदीमा हालेका थिए ।

[4]तात्पर्य फ़िरऔन हो, जो अल्लाहको पनि शत्रु तथा आदरणीय मूसाको पनि शत्रु थियो । अर्थात काठको त्यो बाकस बग्दै जब राजभवनको छेउमा पुग्यो त त्यसलाई बाहिर निकालेर हेरियो र त्यसमा एउटा निर्दोष बालक थियो,

يَأْخُذْهُ عَدُوٌّ لِّي وَعَدُوٌّ لَّهُۥ ۚ وَأَلْقَيْتُ عَلَيْكَ مَحَبَّةً مِّنِّي وَلِتُصْنَعَ عَلَىٰ عَيْنِيٓ ﴿٣٩﴾

तथा मैले आफूतिरबाट विशेष प्रेम एवं स्वीकृति तिमीमाथि प्रदान गरें ।[१] ताकि तिम्रो पालन-पोषण मेरा आँखा समक्ष गरियोस् ।[२]

إِذْ تَمْشِيٓ أُخْتُكَ فَتَقُولُ هَلْ أَدُلُّكُمْ عَلَىٰ مَن يَكْفُلُهُۥ ۖ فَرَجَعْنَٰكَ إِلَىٰٓ أُمِّكَ كَىْ تَقَرَّ عَيْنُهَا وَلَا تَحْزَنَ ۚ وَقَتَلْتَ نَفْسًا فَنَجَّيْنَٰكَ مِنَ ٱلْغَمِّ وَفَتَنَّٰكَ فُتُونًا ۚ فَلَبِثْتَ سِنِينَ

(४०) (स्मरण गर) जबकि तिम्रो दिदी हिंड्दै थियो तथा भनिराखेको थियो यदि तिमी भन्छौ भने म त्यसलाई भनिदिन्छु जो त्यसको संरक्षक बन्न सकोस्,[३] यसप्रकार हामीले तिमीलाई पुनः तिम्रो माता छेउ पुऱ्यायौं ताकि त्यसका आँखा शीतल रहून् । तथा त्यो दुखी नहोस्, तथा तिमीले एउटा व्यक्तिको हत्या[४] गरिदिएका थियौ, त्यसमा पनि हामीले तिमीलाई

जसमा फ़िरऔनले आफ्नो पत्नीको इच्छामा पालन-पोषणका लागि राजभवनमा राख्यो ।

[१]अर्थात् फ़िरऔनको हृदयमा हालिदियो अथवा जनसामान्यका हृदयमा तिम्रो प्रेम हालिदियो ।

[२]अतः अल्लाहको सामर्थ्य तथा त्यसको सुरक्षा एवं संरक्षणको कमाल तथा चमत्कार हेर्नुस् कि जुन बालकको कारण फ़िरऔन अनगिन्ती शिशुहरूको वध गरिसकेको छ, ताकि त्यो बच्चा जीवित नरहोस् । त्यसै बालकलाई अल्लाह तआला त्यसको कोखमा पालन-पोषण गराइराखेको छ । तथा माता आफ्नो बालकलाई दूध खुवाइराखेकी छे, परन्तु त्यसको ज्याला पनि त्यसै मूसाको शत्रुबाट प्राप्त गरिराखेकी छे ।

[३]यो त्यसवखत भयो जब माताले सन्दूक (बाकस) नदीमा हालिदिइन् त पुत्रीसित भनिन् कि अलि यो हेरिराख्नु कि यो कहाँ किनार लाग्छ तथा यसको साथमा के मामिला हुन्छ ? जब अल्लाहको इच्छाले मूसा फ़िरऔनको भवनमा पुगे, नवजात शिशु थिए, अतः दूध खुवाउने स्त्री तथा धायीहरूलाई बोलाइयो । तर मूसा कसैको दूध पिउँदैनथे । मूसाकी दिदी शान्तपूर्वक सारा दृश्य हेरिराखेकी थिइन्, अन्तमा उसले भनी म तिमीलाई यस्तो स्त्री भन्छु, जुन तिम्रो यो कठिनाई समाप्त गरिदिनेछ, उनले भने ठिक छ । अतः तिनले आफ्नी मातालाई, जुन मूसाकी पनि माता थिइन्, बोलाएर ल्याइन् । जब माताले पुत्रलाई आफ्नो काखमा लिइन्, त मूसाले अल्लाहको इच्छा तथा उपाय अनुसार घुटु-घुटु दूध पिउन थाले ।

[४]यो एउटा अर्को उपकारको वर्णन हो, जब मूसाबाट अकस्मात एउटा फ़िरऔनी केवल मुक्का हान्नाले मऱ्यो जसको वर्णन सूरः क़ससमा आउनेछ ।

فِيٓ أَهْلِ مَدْيَنَ ثُمَّ جِئْتَ عَلَىٰ قَدَرٍ يَٰمُوسَىٰ ۝٤٠

चिन्ताबाट बचायौं, अर्थात् हामीले तिम्रो राम्ररी परीक्षण गऱ्यौं ।[1] अनि तिमी कैयन् वर्षसम्म मदयनका मानिसहरूबीच बसिरहयौ ।[2] त्यस पश्चात अल्लाहद्वारा लेखिएका भाग्य अनुसार[3] हे मूसा ! तिमी आयौ ।

وَٱصْطَنَعْتُكَ لِنَفْسِي ۝٤١

(४१) तथा मैले तिमीलाई विशेषरुपले आफ्ना लागि निर्वाचित गरें ।

ٱذْهَبْ أَنتَ وَأَخُوكَ بِـَٔايَٰتِي وَلَا تَنِيَا فِي ذِكْرِي ۝٤٢

(४२) अब तिमी आफ्ना भाइसित मेरा निशानीहरूसँगै लैजाउ, सावधान ! मेरो सुमिरनमा (स्मरण) आलस्य नगर्नु ।[4]

ٱذْهَبَآ إِلَىٰ فِرْعَوْنَ إِنَّهُۥ طَغَىٰ ۝٤٣

(४३) तिमी दुबै फ़िरऔनका पासमा जाउ, त्यसले ठूलो धूर्तता गरेको छ ।

---

[1] فتـون यो دخول तथा خروج को समरूप धातु हो अर्थात् ابتليناك ابتلاء अर्थात् हामीले तिमीलाई राम्ररी जाँच्यौं अथवा यो बहुवचन हो فتنة को । जस्तै حجرة को तथा بدرة को بدور बहुवचन हो । अर्थात् हामीले तिमीलाई कैयौं पटक अथवा निरन्तर परीक्षाहरूमा पाऱ्यौं अथवा कठिनाईहरूबाट निकाल्यौं । जस्तै जुन वर्ष बच्चाहरूको हत्याको थियो, तिमीलाई पैदा गऱ्यौं, तिम्रो माताले तिमीलाई नदीका धाराहरूलाई सुम्पिदिइन्, सबै धाई आमाहरूका दूध तिमीलाई निषेध गरियो, तिमीले फिरऔनका दाह्री समातिहालेको थियौ जसमाथि उसले तिम्रो हत्याको संकल्प गरेको थियो, तिम्रा हातबाट किब्तीको हत्या भयो, इत्यादि यी सबै परीक्षाको घडीमा हामीले नै तिम्रो सहायता एवं सुरक्षा गरिरहयौं ।

[2] अर्थात फिरऔनीको अकस्मात हत्या पश्चात तिमी यहाँबाट निस्केर मदयन गयौ तथा त्यहाँ कैयन् वर्ष रहयौ ।

[3] अर्थात् यस्तो समयमा तिमी आयौ जुनबेला मैले आफ्ना निर्णय तथा भाग्यमा तिमीसित वार्ता तथा नबूअत प्रदान गर्नका लागि लेखेको थिएँ । अथवा قدر बाट तात्पर्य आयु हो अर्थात आयुको त्यस अवस्थामा आयो जुन नबूअतका लागि उचित छ अर्थात् चालीस वर्षको आयुमा ।

[4] यसमा अल्लाहतिर आमन्त्रित गरिनेहरूका लागि ठूलो शिक्षा छ कि उनीहरूलाई अधिकतर अल्लाहको सुमिरन (स्मरण) गर्नुपर्दछ ।

فَقُولَا لَهُۥ قَوْلًا لَّيِّنًا لَّعَلَّهُۥ يَتَذَكَّرُ أَوْ يَخْشَىٰ ﴿٤٤﴾

(४४) उसलाई कोमलताले[1] बुझाउ, शायद त्यो बुझोस् अथवा तर्सोस् ।

قَالَا رَبَّنَآ إِنَّنَا نَخَافُ أَن يَفْرُطَ عَلَيْنَآ أَوْ أَن يَطْغَىٰ ﴿٤٥﴾

(४५) दुबैले भने, हे हाम्रा प्रभु ! हामीलाई भय छ कि फ़िरऔनले हामीमाथि कुनै अत्याचार नगरोस् अथवा आफ्नो धूर्ततामा अगाडी नबढोस् ।

قَالَ لَا تَخَافَآ ۖ إِنَّنِى مَعَكُمَآ أَسْمَعُ وَأَرَىٰ ﴿٤٦﴾

(४६) उत्तर प्राप्त भयो कि तिमी दुबै कदापि भय नगर, म तिम्रा ·साथमा छु तथा सुन्दै-हेर्दै रहनेछु ।[2]

فَأْتِيَاهُ فَقُولَآ إِنَّا رَسُولَا رَبِّكَ فَأَرْسِلْ مَعَنَا بَنِىٓ إِسْرَٰٓءِيلَ وَلَا تُعَذِّبْهُمْ ۖ قَدْ جِئْنَٰكَ بِـَٔايَةٍ مِّن رَّبِّكَ ۖ وَٱلسَّلَٰمُ عَلَىٰ مَنِ ٱتَّبَعَ ٱلْهُدَىٰٓ ﴿٤٧﴾

(४७) तिमी उसको पासमा गई भन कि हामी तिम्रो प्रभुका ईशदूत (पैग़म्बर) हौं, तिमी हाम्रो पासमा इस्राईलका सन्तानलाई पठाइदेउ । उनीहरूका दण्ड समाप्त गर । हामी त तिम्रो पासमा तिम्रो प्रभुको तर्फबाट निशानीहरू लिएर आएका छौं, शान्ति उसैका लागि छ । जसले यो मार्गदर्शनलाई दृढता[3] ले अपनाउँछ ।

[1]यो योग्यता पनि अल्लाहतिर आमन्त्रित गर्नेवालाहरूका लागि अति आवश्यक छ । किनभने कठोरताबाट मानिस भाग्दछन् तथा सरलता एवं कोमलताका निकट आउँछन् तथा प्रभावित हुन्छन् यदि उनीहरू मार्गदर्शन प्राप्त गर्नेवाला हुनेछन् ।

[2]तिमी गएर फ़िरऔनसित जुन भन्नेछौ तथा त्यसको उत्तर त्यसले दिनेछ, म त्यो सुन्दै तथा तिम्रा तथा त्यसको प्रक्रियालाई हेर्दै रहनेछु । त्यसका अनुसार म तिम्रो सहायता तथा त्यसका षड्यन्त्रहरूलाई निष्फल पार्नेछु, यसैकारण उसको पासमा जाउ, संकोचको कुनै आवश्यकता छैन ।

[3]यो सलाम सम्मानको लागि होइन, बरु शान्ति तथा सुरक्षातिर आमन्त्रण हो । जस्तो नबी सल्लल्लाहु अलैहि वसल्लमले रोमको राजा हरकूलसको नाममा पत्र लेख्नु भएको थियो । «أَسْلِمْ تَسْلَمْ» (अस्लीम तस्लम) (इस्लाम धर्म स्वीकार गरिहाल, सुरक्षामा रहनेछौ) यसैप्रकार पत्रको प्रारम्भमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले ﴿وَٱلسَّلَٰمُ عَلَىٰ مَنِ ٱتَّبَعَ ٱلْهُدَىٰٓ﴾ पनि लेख्नु भयो । (इब्ने कसीर) यसको अर्थ यो हो कि कुनै गैरमुस्लिमलाई पत्र अथवा सभामा सम्बोधन गर्नुछ भने उसलाई यिनै शब्दहरूमा सलाम गरियोस् जुन अनुबन्धित छ मार्गदर्शन अपनाउनुसित ।

إِنَّا قَدْ أُوحِيَ إِلَيْنَا أَنَّ الْعَذَابَ عَلَىٰ مَن كَذَّبَ وَتَوَلَّىٰ ﴿٤٨﴾

(४८) हामीतिर प्रकाशना (वह्य) गरिएको छ कि जो झुठ्लाउँछ तथा मुख फर्काउँछ त्यसका लागि यातनाहरू छन् ।

قَالَ فَمَن رَّبُّكُمَا يَا مُوسَىٰ ﴿٤٩﴾

(४९) (फ़िरऔनले) सोध्यो कि हे मूसा ! तिमी दुबैको प्रभु को हो ?

قَالَ رَبُّنَا الَّذِي أَعْطَىٰ كُلَّ شَيْءٍ خَلْقَهُ ثُمَّ هَدَىٰ ﴿٥٠﴾

(५०) उत्तर दिए कि हाम्रो प्रभु त्यो हो, जसले प्रत्येकलाई त्यसको विशेष रुप प्रदान गऱ्यो, अनि मार्गदर्शन पनि दियो ।[1]

قَالَ فَمَا بَالُ الْقُرُونِ الْأُولَىٰ ﴿٥١﴾

(५१) उसले सोध्यो (ठीक छ यो भन कि) पूर्वकालका मानिसहरूको के दशा हुनेछ ?[2]

قَالَ عِلْمُهَا عِندَ رَبِّي فِي كِتَابٍ ۖ لَّا يَضِلُّ رَبِّي وَلَا يَنسَى ﴿٥٢﴾

(५२) उत्तर दिए कि तिनका ज्ञान मेरो प्रभुको पासमा भयको किताबमा (उपस्थित) छ, न त मेरो प्रभु त्रुटि गर्छ न बिर्सन्छ ।[3]

[1]जस्तै जुन रूपरेखा मनुष्यको लागि उचित थियो, त्यसले त्यसलाई, जुन पशुहरूका लागि योग्य थिए, त्यो पशुहरूलाई प्रदान गऱ्यो । मार्ग देखायो को अर्थ प्रत्येक जीवधारीलाई त्यसको प्राकृतिक आवश्यकताका अनुसार रहन-सहन, खान-पीन, तथा आवास-निवासको विधि बुझायो, त्यसैअनुसार प्रत्येक जीवधारी आफ्नो जीवन सामग्री एकत्रित गर्दछ तथा जीवनका यी दिन व्यतीत गर्दछ ।

[2]फ़िरऔनले कुराको दिशा बदल्नका लागि यो प्रश्न गऱ्यो, अर्थात पूर्व कालमा जुन मानिसहरू अल्लाहका अतिरिक्त अरुहरूको पूजा गर्दछ, संसारबाट गइहाले, तिनको परिणाम के हुनेछ ?

[3]आदरणीय मूसाले उत्तर दिए, तिनका ज्ञान न तिमीलाई छ न मलाई । परन्तु तिनका ज्ञान मेरो प्रभुलाई छ, जुन त्यसको पासमा भएको किताबमा विद्यमान छ । त्यसले त्यसका अनुसार तिनीहरूलाई प्रतिफल तथा दण्ड दिनेछ, अनि त्यसको ज्ञान त्यसैप्रकार प्रत्येक वस्तुलाई आफ्नो ज्ञानको परिधिमा लिएको छ कि त्यसको दृष्टिबाट कुनै सानो-ठूलो कुरा ओझेल हुनसक्दैन, न उसले कुनै कुरो बिर्सन्छ । जबकि जीवधारीहरू भित्र दुबै कुराहरूको समावेश छ । एक त उनीहरूका ज्ञान सम्पूर्ण छैन, बरु कम छ ।

الَّذِيْ جَعَلَ لَكُمُ الْأَرْضَ مَهْدًا وَّسَلَكَ لَكُمْ فِيْهَا سُبُلًا وَّأَنْزَلَ مِنَ السَّمَاءِ مَاءً ۗ فَأَخْرَجْنَا بِهٖ أَزْوَاجًا مِّنْ نَّبَاتٍ شَتّٰى ﴿٥٣﴾

(५३) उसैले तिम्रो निम्ति धर्तीलाई ओछ्यान बनाएको छ तथा त्यसमा तिम्रो हिंडाइको लागि मार्ग बनाएको छ तथा आकाशबाट वर्षा पनि त्यही गर्दछ, अनि त्यस वर्षाको कारण विभिन्न प्रकारका पैदावार पनि हामीले नै उब्जाउँछौं ।

كُلُوْا وَارْعَوْا أَنْعَامَكُمْ ۗ إِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّأُولِي النُّهٰى ﴿٥٤﴾

(५४) तिमी स्वयं खाउ तथा आफ्ना पशुहरूलाई पनि चराउ ।[1] निःसन्देह यसमा बुद्धिमानीहरूका लागि[2] धेरै निशानीहरू छन् ।

مِنْهَا خَلَقْنٰكُمْ وَفِيْهَا نُعِيْدُكُمْ وَمِنْهَا نُخْرِجُكُمْ تَارَةً أُخْرٰى ﴿٥٥﴾

(५५) त्यसै धर्तीबाट हामीले तिमीलाई पैदा गर्‍यौं तथा त्यसैमा पुनः वापस फर्काउनेछौं तथा त्यहाँबाट पुनः तिमी सबैलाई[3] निकाली उभ्याउनेछौं ।

अर्को कुरो ज्ञान हुनुका पश्चात् त्यो बिर्सन पनि सक्दछन् । मेरो प्रभु यी दुवै त्रुटिहरूबाट पवित्र छ । प्रभुका अन्य गुणहरूको वर्णन भइराखेको छ ।

[1]अर्थात् यस विभिन्न प्रकारका पैदावारमा केही वस्तुहरू तिम्रा भोजन, स्वाद तथा स्फूर्तिका सामग्री हुन् तथा केही तिम्रा चौपाया तथा पशुहरूका लागि हुन् ।

[2] نـهى बहुवचन हो نهية को, जसको अर्थ बुद्धि हो أولوا لنهى बुद्धिवाला, बुद्धिलाई نهية तथा बुद्धिमानलाई ذو نهيـة यसकारण भनिन्छ कि अन्त्यमा उनैको रायमा मामिलाको अन्त्य हुन्छ अथवा यसकारण कि यी मनलाई नराम्रोबाट रोक्दछन् । ينهون النفس عن القبائح (फ़तुहल क़दीर)

[3]केही कथनहरूका अनुसार गाड्नुका पश्चात तीन पटक माटो हाल्दाखेरि यस आयतको पाठ गर्नु नबी सल्लल्लाहु अलैहि वसल्लमबाट प्रमाणित छ । परन्तु प्रमाण अनुसार यो कथन क्षीण छ । परन्तु आयत बिना ती न अञ्जुली माटो हाल्ने कथन जुन इब्ने माजामा छ, सही छ, यसकारण गाड्नु पश्चात दुवै हातका अञ्जुलीले तीन-तीन पटक माटो हाल्नलाई धर्म गुरूहरूले उचित भनेका छन् । हेर्नुस् किताबुल जनायेज़ पृष्ठ १५२ तथा इरवाउल गलील संख्या २५१ भाग ३ पृष्ठ २००

وَلَقَدْ أَرَيْنَٰهُ ءَايَٰتِنَا كُلَّهَا فَكَذَّبَ وَأَبَىٰ ﴿٥٦﴾

(५६) तथा हामीले उसलाई आफ्ना सबै निशानी (प्रति) देखायौं, तर उसले तैपनि झुठ्लायो तथा अस्वीकार गरिदियो ।

قَالَ أَجِئْتَنَا لِتُخْرِجَنَا مِنْ أَرْضِنَا بِسِحْرِكَ يَٰمُوسَىٰ ﴿٥٧﴾

(५७) भन्नथाल्यो हे मूसा ! के तिमी हाम्रो पासमा यसकारण आएका छौ कि हामीलाई आफ्नो जादूको शक्तिले हाम्रो देशबाट निकालिदेउ ।[1]

فَلَنَأْتِيَنَّكَ بِسِحْرٍ مِّثْلِهِۦ فَٱجْعَلْ بَيْنَنَا وَبَيْنَكَ مَوْعِدًا لَّا نُخْلِفُهُۥ نَحْنُ وَلَآ أَنتَ مَكَانًا سُوًى ﴿٥٨﴾

(५८) ठीक छ, हामी पनि तिम्रो सामना गर्नको लागि यसै जस्तो जादू अवश्य ल्याउने छौं । अब तिमी हाम्रो तथा आफ्नो मध्ये वायदा (वाचा) को समय निर्धारित गरिहाल[2] कि न हामी त्यसका विरूद्ध गरौं तथा न तिमी । खुला मैदान[3] मा मुक़ाबिला (प्रतियोगिता) होस् ।

قَالَ مَوْعِدُكُمْ يَوْمُ ٱلزِّينَةِ وَأَن يُحْشَرَ ٱلنَّاسُ ضُحًى ﴿٥٩﴾

(५९) (मूसाले) उत्तर दिए कि शोभा तथा समारोहका दिन[4] को वचन छ तथा यो कि मानिसहरू सूर्योदय हुँदा एकत्रित भइहालून् ।



[1]जब फ़िरऔनलाई स्पष्ट प्रमाणका साथ चमत्कार पनि देखाइए जुन लट्ठी तथा हातको सेतो चमत्कार हुनुको रूपमा आदरणीय मूसालाई प्रदान गरिएका थिए, तब फ़िरऔनले त्यसलाई जादूको कर्तब्य (खेल) ठान्यो तथा भन्यो, ठीक छ, तिमी हामीलाई यस जादूको शक्तिबाट हाम्रो धर्तीबाट निकाल्न चाहन्छौ ।

[2] موعد धातु हो अथवा यदि समय तथा स्थान वाचक छ भने काल तथा स्थान दुवै तात्पर्य हुन सक्दछन् कि कुनै स्थान तथा दिन निर्धारित गरिहाल ।

[3] مكانا سوى सफा समतल स्थान, जहाँ हुनेवाला मुक़ाबिलालाई सबै मानिसहरू सरलताले हेर्न सकून् अथवा यस्तो समलत स्थान जहाँ दुबै पक्ष सुबिधापूर्वक पुग्न सकून् ।

[4]यसबाट तात्पर्य नयाँ वर्षको दिन अथवा अन्य कुनै वार्षिक उत्सव अथवा मेलाको दिन हो, जसलाई उनीहरूले ईदका रूपमा मनाउँदथे ।

فَتَوَلّٰى فِرْعَوْنُ فَجَمَعَ كَيْدَهٗ ثُمَّ اَتٰى ﴿٦٠﴾

(६०) अनि फ़िरऔन फर्किहाल्यो तथा उसले आफ्ना हत्कण्डा एकत्रित गऱ्यो, अनि आयो ।[1]

قَالَ لَهُمْ مُّوْسٰى وَيْلَكُمْ لَا تَفْتَرُوْا عَلَى اللّٰهِ كَذِبًا فَيُسْحِتَكُمْ بِعَذَابٍ ۚ وَقَدْ خَابَ مَنِ افْتَرٰى ﴿٦١﴾

(६१) मूसाले उनीसित भने कि तिम्रो विनाश होस्, अल्लाह (तआ़ला) माथि झूठ तथा आरोप नलगाउ कि उसले तिमीहरूलाई यातनाहरूबाट नाश गरिदेओस् । याद राख ! त्यो कहिल्यै सफल हुनेछैन जसले झूठो कुरा रच्यो ।[2]

فَتَنَازَعُوْٓا اَمْرَهُمْ بَيْنَهُمْ وَاَسَرُّوا النَّجْوٰى ﴿٦٢﴾

(६२) त्यसपछि यिनीहरू आपसमा विचार-विमर्शका विभिन्न मत भइहाले तथा लुकेर गुप्त मन्त्रणा गर्नथाले ।[3]

قَالُوْٓا اِنْ هٰذٰنِ لَسٰحِرٰنِ يُرِيْدٰنِ اَنْ يُّخْرِجٰكُمْ مِّنْ اَرْضِكُمْ بِسِحْرِهِمَا وَيَذْهَبَا بِطَرِيْقَتِكُمُ الْمُثْلٰى ﴿٦٣﴾

(६३) भन्नथाले कि यी दुबै जादूगर हुन् तथा यिनको दृढ संकल्प छ कि आफ्नो जादूको शक्तिले तिमीलाई तिम्रा सन्देशबाट निष्काशित गरिदेऊन् तथा तिम्रो सर्वोच्च धनलाई नाश गरिदेऊन् ।[4]

[1]अर्थात् विभिन्न नगरहरूबाट दक्ष जादूगरहरूलाई एकत्रित गरी सभा-स्थलमा आयो।

[2]जब फ़िरऔन सभा-स्थलमा जादूगरहरूलाई प्रतियोगिताका लागि उत्साहित गरिराखेको थियो तथा उपहार तथा आफ्नो विशेष निकटता प्रदान गर्ने कुरा गरिराखेको थियो, त्यतिखेर आदरणीय मूसाले पनि मुक़ाबिला पूर्व उनीहरूलाई सम्बोधित गरे तथा उनका वर्तमान व्यवहारमा उनीहरूलाई अल्लाहको प्रकोपसित तर्साए ।

[3]आदरणीय मूसाको सम्बोधनबाट उनीहरूमा आपसमा केही मतभेद भयो तथा केहीले कानेखुसी गर्दै भन्नलागे कि यो यस्तो नहोस् कि अल्लाहको नबी होस ? त्यसको वार्ता जादूगरहरूको जस्तो होइन पैग़म्बरहरूको जस्तो लाग्छ । केहीले यसका विपरीत विचार व्यक्त गरे ।

[4]مثلى विशेषण हो طريقة को । यो أمثل को स्त्रीलिङ्ग हो, श्रेष्ठको अर्थमा छ । अर्थ यो हो कि यदि यी दुबै दाजुभाई आफ्नो "जादू" को शक्तिबाट प्रभावशाली भइहाले भने सरदार, मुखिया धनवान एवं सम्मानित व्यक्ति त्यसतिर आकर्षित हुनेछन् जसबाट हाम्रो राज्य खतरामा छ तथा उनको राजको मार्ग प्रशस्त हुनेछ । यसका अतिरिक्त हाम्रो अति उत्तम मार्ग अथवा धर्म, त्यसलाई पनि समाप्त गरिदिनेछन् । अर्थात् आफ्नो मूर्तिपूजक धर्मलाई 'अति उत्तम' बनाइदियो ।

فَأَجْمِعُوا كَيْدَكُمْ ثُمَّ ائْتُوا صَفًّا ۚ وَقَدْ أَفْلَحَ الْيَوْمَ مَنِ اسْتَعْلَىٰ ﴿٦٤﴾

(६४) अत: तिमी सबै मिलेर आफ्नो उपाय जुटाइहाल अनि पंक्तिबद्ध भएर आउ । आज यो विजयी भयो त्यही सफल भयो ।

قَالُوا يَا مُوسَىٰ إِمَّا أَنْ تُلْقِيَ وَإِمَّا أَنْ نَكُونَ أَوَّلَ مَنْ أَلْقَىٰ ﴿٦٥﴾

(६५) उनीहरूले भने कि हे मूसा ! या त तिमी फँयाक अथवा हामी पहिले फँयाक्छौं ।

قَالَ بَلْ أَلْقُوا ۖ فَإِذَا حِبَالُهُمْ وَعِصِيُّهُمْ يُخَيَّلُ إِلَيْهِ مِنْ سِحْرِهِمْ أَنَّهَا تَسْعَىٰ ﴿٦٦﴾

(६६) उत्तर दिए, होइन तिमीहरु नै पहिले फ्याँक,[1] अब त मूसालाई यो भ्रम हुनथाल्यो कि उनका डोरी तथा लट्ठीहरू उनको जादूको शक्तिले दौडिराखेका छन् ।[2]

فَأَوْجَسَ فِي نَفْسِهِ خِيفَةً مُوسَىٰ ﴿٦٧﴾

(६७) यसबाट मूसा मनै-मनमा तर्सन थाले ।

---

जस्तो कि आज पनि झूठा धर्म तथा गुटहरूका अनुयायी यसै निराधार भ्रममा परेका छन् । सत्य भनेको छ अल्लाह तआलाले ।

﴿ كُلُّ حِزْبٍ بِمَا لَدَيْهِمْ فَرِحُونَ ﴾

"प्रत्येक गुट जुन उसको पासमा छ, त्यसमाथि खुशी भइराखेको छ ।" (सूर:अल-रूम-३२)

[1]आदरणीय मूसाले प्रथम उनलाई आफ्नो खेल प्रदर्शनका लागि भने ताकि उनीलाई यो स्पष्ट भइहालोस् कि उनी जादूगरहरूको यति ठूलो संख्यासित, जुन फ़िरऔन एकत्रित गरेर ल्याएको छ, तथा त्यसैप्रकार उनका जादूका खेलबाट कदापि भयभीत छैनन् । दोस्रो कुरो उनका जादूका खेल-तमाशा, जब अल्लाहका चमत्कार बाट हेर्दाहेर्दै समाप्त एवं निरस्त हुनेछन् त यसको अति उत्तम प्रभाव पर्नेछ तथा जादूगर यो विचार गर्नमा बाध्य हुनेछन् कि यो जादू होइन, वास्तवमा यसलाई अल्लाहको पक्ष प्राप्त छ कि एकक्षणमा यसको एक लट्ठी हाम्रा सारा खेल तमाशालाई समाप्त पारिहाले ।

[2]कुर्आनका यी शब्दहरूबाट ज्ञात हुन्छ कि डोरी तथा लट्ठीहरू वास्तवमा सर्प बनेको थिएन, बरु जादूको शक्तिले यस्तो प्रतीत भइराखेको थियो जस्तो नजरबन्द गरिन्छ । यसको प्रभाव यो हुन्छ कि अस्थायी तथा क्षणिक रुपले हेर्नेहरूमाथि भय आक्षादित हुनजान्छ, यद्यपि वस्तुको वास्तविकता परिवर्तित हुँदैन । अर्को कुरो यो ज्ञात भयो कि जादू चाहे जति ठूलो होस्, त्यो वस्तुको वास्तविकता परिवर्तित गर्न सक्दैन ।

قُلۡنَا لَا تَخَفۡ اِنَّكَ اَنۡتَ الۡاَعۡلٰى ﴿٦٨﴾

(६८) हामीले भन्यौं कि कुनै भय नगर, निःसन्देह तिमी नै प्रभावशाली तथा सम्मानित हुनेछौ ।[1]

وَاَلۡقِ مَا فِىۡ يَمِيۡنِكَ تَلۡقَفۡ مَا صَنَعُوۡا ؕ اِنَّمَا صَنَعُوۡا كَيۡدُ سٰحِرٍ ؕ وَلَا يُفۡلِحُ السّٰحِرُ حَيۡثُ اَتٰى ﴿٦٩﴾

(६९) तथा तिम्रो दाहिने हातमा जे छ त्यसलाई फँयाक ताकि उनको सबै कारीगरीलाई यसले समाप्त पारिदेओस्, उनीहरूले जे-जति बनाएका छन् यो मात्र जादूगरहरूका स्वाङ हुन् तथा जादूगर कतैबाट आएपनि सफल हुँदैन ।

[1]यस भयङ्गर दृश्यलाई देखेर यदि आदरणीय मूसाले भयको आभास गरे भने यो एउटा स्वभाविक कुरा थियो, जुन न त नबूअतको विपरीत छ न शुद्धताको किनभने नबी पनि मनुष्य हुन्छ तथा मानवीय स्वभाविक माँगहरूबाट न त उच्च हुन्छ न हुनसक्छ । यसबाट ज्ञात हुन्छ कि जुनप्रकारे नबीहरूलाई अन्य मानवीय कठिनाइहरू हुन्छन् अथवा हुनसक्छन्, यसैप्रकार उनी जादूबाट पनि प्रभावित हुनसक्छन् जस्तो कि नबी सल्लल्लाहु अलैहि वसल्लममाथि यहूदीहरूले जादू गरेका थिए जसको प्रभावको उहाँ सल्लल्लाहु अलैहि वसल्लमले संवेदन गर्नुहुन्थ्यो, यसबाट पनि नबूअतको पदमा कुनै दोष आउँदैन किनभने यसबाट नबूअतका कार्य प्रभावित हुँदैनन्, अल्लाह तआला नबीको सुरक्षा गर्दछ तथा जादूबाट प्रकाशना अथवा रिसालतका कर्तव्यहरूलाई प्रभावित हुन दिँदैन । तथा सम्भव छ कि यो भय यसकारण भएको होस् कि मैले लट्ठी फँयाक्नुभन्दा पूर्व नै मानिसहरू उनका जादूका खेल तथा तमाशाहरूलाई देखेर प्रभावित नभईहालून्, परन्तु संभावित कुरो यो हो कि यो भय यसकारण भयो कि यी जादूगरहरूले पनि जुन खेल तमाशा प्रदर्शित गरे त्यो लट्ठीहरूद्वारा नै देखाए, जबकि मूसासित पनि लट्ठी थियो, जसलाई उनले धर्तीमा फँयाक्नु थियो, मूसाको हृदयमा विचार आयो कि हेर्नेहरू यो नठानून् कि दुबैले एउटै प्रकारले जादू प्रस्तुत गरे, यसकारण यो निर्णय कसरी गरियोस् कि कुनचाहिं जादू हो तथा कुन चाहिं चमत्कार ? को विजयी हो तथा को पराजित ? अर्थात् जादू तथा चमत्कारको जुन अन्तर बनाउनुको उद्देश्य हो, त्यो वर्णित शंकाको कारण प्राप्त हुनसक्ने छैन, यसकारण यो ज्ञान भयो कि नबीहरूलाई कहिलेकाहीं यो पनि ज्ञान हुँदैन कि उनका हातबाट कुनचाहिं चमत्कार घटित हुनेवाला छ । स्वयं चमत्कार देखाउने सामर्थ्य त टाढाको कुरो छ । यो त मात्र अल्लाहको कार्य हो कि त्यसले नबीहरूको हातबाट चमत्कार देखाओस्, यसप्रकार मूसा अलैहिस्सलामको यस शंका तथा भयलाई समाप्त गर्दै अल्लाह तआलाले भन्नुभयो कि मूसा कुनै पनि प्रकारले भयभीत हुनुको आवश्यकता छैन, तिमी नै विजयी रहनेछौ, यस वाक्यबाट स्वभाविक भय अन्य शंकाहरू, सबैलाई समाप्त गरिदिए । अतः यस्तै नै भयो जस्तो कि आउने आयतमा छ ।

فَأُلْقِيَ السَّحَرَةُ سُجَّدًا قَالُوٓا ءَامَنَّا بِرَبِّ هَٰرُونَ وَمُوسَىٰ ۝٧٠

(७०) त्यसपछि त सारा जादूगर दण्डवत् (सज्‌दा) भइहाले तथा भने कि हामी त हारुन तथा मूसाको प्रभुमाथि ईमान ल्यायौं ।

قَالَ ءَامَنتُمْ لَهُۥ قَبْلَ أَنْ ءَاذَنَ لَكُمْ ۖ إِنَّهُۥ لَكَبِيرُكُمُ ٱلَّذِى عَلَّمَكُمُ ٱلسِّحْرَ ۖ فَلَأُقَطِّعَنَّ أَيْدِيَكُمْ وَأَرْجُلَكُم مِّنْ خِلَٰفٍ وَلَأُصَلِّبَنَّكُمْ فِى جُذُوعِ ٱلنَّخْلِ وَلَتَعْلَمُنَّ أَيُّنَآ أَشَدُّ عَذَابًا وَأَبْقَىٰ ۝٧١

(७१) (फ़िरऔनले) भन्यो कि के मेरो आज्ञा पूर्व नै तिमी त्यसमाथि ईमान ल्यायौ ? निःसन्देह यही तिम्रो त्यो ठूलो (गुरु) हो जसले तिमी सबैलाई जादू सिकाएको छ, (सुनिहाल) म तिम्रा हात-खुट्टा उल्टो-सुल्टो[1] कटाएर तिमी सबैलाई खजूरका फाँसीमा भुण्ड्याउन लगाइदिनेछु तथा तिमीलाई पूर्णरूपले ज्ञात भइहाल्ने छ कि हामी मध्येबाट कसको मार अधिक कठोर तथा स्थाई छ ।

قَالُوا لَن نُّؤْثِرَكَ عَلَىٰ مَا جَآءَنَا مِنَ ٱلْبَيِّنَٰتِ وَٱلَّذِى فَطَرَنَا ۖ فَٱقْضِ مَآ أَنتَ قَاضٍ ۖ إِنَّمَا تَقْضِى هَٰذِهِ ٱلْحَيَوٰةَ ٱلدُّنْيَآ ۝٧٢

(७२) (उनीहरूले) उत्तर दिए कि असम्भव छ कि हामी तिमीलाई प्रधानता दिऊँ ती तर्कहरूमाथि जुन हाम्रा समक्ष आइसके तथा त्यस अल्लाहमाथि जसले हामीलाई पैदा गऱ्यो[2] अब त तिमी जे गर्न चाहन्छौ गर, तिमी जे-जति आदेश चलाउन सक्छौ, त्यो यसै सांसारिक जीवनमा[3] नै छ ।

[1] من خــلاف (उल्टो-सुल्टो) को अर्थ हो कि दाहिने हात र बायाँ खुट्टा अथवा बायाँ हात दायाँ खुट्टा ।

[2] यो अनुवाद त्यस स्थितिमा छ जब والذي فطرنا को सम्बन्ध ماجاءنا सित हुन्छ । तथा यो पनि उचित छ । परन्तु केही व्याख्याकारहरूले यसलाई शपथ बताएका छन् । अर्थात् सौगन्ध छ त्यस अल्लाहको अस्तित्वको जसले हामीलाई पैदा गऱ्यो, तिमीलाई यी तर्कहरूको आधारमा प्रधानता दिने छैनौं, जुन हाम्रा समक्ष आइसके ।

[3] अर्थात् तिम्रो वशमा जे-जति छ, गरिहाल, हामी जान्दछौं कि तिम्रो वश मात्र यस संसारसम्म चल्नसक्छ, जबकि हामी जुन प्रभुमाथि ईमान ल्याएका छौं, त्यसको राज्य त लोक दुबै स्थानहरूमा छ । मर्नु पश्चात त हामी तिम्रो अत्याचार तथा क्रुरताबाट बचिहाल्नेछौं ।

إِنَّآ ءَامَنَّا بِرَبِّنَا لِيَغْفِرَ لَنَا خَطَٰيَٰنَا وَمَآ أَكْرَهْتَنَا عَلَيْهِ مِنَ ٱلسِّحْرِ ۗ وَٱللَّهُ خَيْرٌ وَأَبْقَىٰٓ ﴿٧٣﴾

(७३) हामी (यस आशाले) आफ्नो प्रभुमाथि ईमान ल्यायौं ताकि त्यसले हाम्रा त्रुटिहरूलाई क्षमा गरिदेओस् तथा (विशेषगरी) (जादूगरीको पाप) जे-जति तिमीले हामीलाई बाध्य गरेर गराएका[1] छौ, अल्लाह नै सर्वश्रेष्ठ तथा अनन्त छ ।[2]

إِنَّهُۥ مَن يَأْتِ رَبَّهُۥ مُجْرِمًا فَإِنَّ لَهُۥ جَهَنَّمَ لَا يَمُوتُ فِيهَا وَلَا يَحْيَىٰ ﴿٧٤﴾

(७४) कुरो यही छ कि जो पनि पापी बनेर अल्लाह (तआला) कहाँ जानेछ, त्यसको लागि नरक् छ, जहाँ न मृत्यु हुनेछ न जीवन ।[3]

किनभने शरीरबाट प्राण निस्कें पश्चात तिम्रो शक्ति समाप्त भइहाल्नेछ परन्तु यदि हामी आफ्नो प्रभुका अवज्ञाकारी रहयौं भने, त मर्नु पश्चात पनि प्रभुको शक्तिबाट उम्कन सक्दैनौं, त्यो हामीलाई घोर यातना दिनुको सामर्थ्य राख्दछ । प्रभुमाथि ईमान ल्याउनुका पश्चात एउटा ईमानवालाको जीवनमा जुन महान परिवर्तन आउनु, संसारबाट अलगाव तथा आखिरतको स्थाई जीवनमा जुनप्रकार विश्वास हुनुपर्छ तथा फेरि यस विश्वास एवं ईमानमाथि जुन दुख आए, उनीहरुलाई जुन साहस तथा धैर्य एवं दृढतासित सहन गर्नुपर्छ जादूगरहरूले त्यसको एउटा उत्तम आदर्श प्रस्तुत गरे कि ईमान ल्याउनुपूर्व उनी कुन प्रकार फ़िरऔंनबाट उपहार तथा सांसारिक पद तथा मर्यादाका आकांक्षा थिए, परन्तु ईमानका पश्चात उनीहरूलाई कुनै प्रलोभन तथा मोह विचलित गर्न सकेन, न दण्ड तथा यातनाका धम्कीहरूले उनीहरूलाई ईमानबाट मुख फर्काउनमा (विमुख) सफल हुनसके ।

[1]अर्को अनुवाद यसको यो हो कि "हाम्रा ती त्रुटिहरू पनि क्षमा गरिदेउ जुन मूसासितको प्रतिस्पर्धामा तिमीले बाध्य गराएपछि हामीले जादूको रूपमा गरायौं ।" यस अवस्थामा خطايانا को सम्बन्ध ما أكرهتنا सित हुनेछ ।

[2]यी फ़िरऔनका शब्द ﴿وَلَتَعْلَمُنَّ أَيُّنَآ أَشَدُّ عَذَابًا وَأَبْقَىٰ﴾ को उत्तर छ कि हे फ़िरऔन ! तिमी जुन हामीलाई कडा यातना दिइराखेका छौ, अल्लाह तआलाका दरबारमा जुन प्रतिफल तथा प्रत्युपकार प्राप्त हुनेछ, त यसभन्दा अत्याधिक श्रेष्ठ तथा स्थाई छ ।

[3]अर्थात् यातनाबाट हैरान भई मृत्युको कामना गर्नेछन्, परन्तु मृत्यु आउने छैन तथा रात-दिन यातनामा घेरिएको अवस्थामा रहनु, खान-पिउनको लागि ज़क़्क़ूम (विषालु कैक्टस) जस्ता नमिठो स्वाद भएको वृक्ष तथा नरकवालाहरूको शरीरबाट निस्केका रगत एवं पिप मिल्न पाउनु, यो कुनै जीवन हुनेछ र ? اللهم أجرنا من عذاب جهنم (हे अल्लाह ! हामीलाई नरकको यातनाबाट बचाउनुहोस्)

وَمَنْ يَأْتِهِ مُؤْمِنًا قَدْ عَمِلَ الصَّٰلِحَٰتِ فَأُولَٰٓئِكَ لَهُمُ الدَّرَجَٰتُ الْعُلَىٰ ﴿٧٥﴾

(७५) तथा जो पनि त्यस छेउ ईमानवाला भएर आउनेछ तथा त्यसले सदाचार पनि गरेको हुनेछ त्यसका लागि उच्च तथा उत्तम पद (श्रेणीहरू) छन् ।

جَنَّٰتُ عَدْنٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَٰرُ خَٰلِدِينَ فِيهَا ۚ وَذَٰلِكَ جَزَآءُ مَن تَزَكَّىٰ ﴿٧٦﴾

(७६) स्थाई स्वर्ग जसका मुनि नदीहरू बगिराखेका हुन्छन्, जहाँ उनी सधैं रहनेछन् । यही पारितोषिक हो प्रत्येक त्यस व्यक्तिको जो पवित्र छ ।[1]

وَلَقَدْ أَوْحَيْنَآ إِلَىٰ مُوسَىٰٓ أَنْ أَسْرِ بِعِبَادِي فَاضْرِبْ لَهُمْ طَرِيقًا فِي الْبَحْرِ يَبَسًا لَّا تَخَٰفُ دَرَكًا وَلَا تَخْشَىٰ ﴿٧٧﴾

(७७) तथा हामीले मूसातिर प्रकाशना (वह्य) अवतरित गऱ्यौं ताकि तिमी राता-रात मेरा भक्तहरूलाई लिएर हिंड[2] तथा उनका लागि समुद्रमा सुख्खा मार्ग बनाउ,[3] अनि त्यसपछि न तिमीलाई कोही आइ समात्ने कुराको भय हुनेछ न त्रास ।[4]

[1]नरकवासीहरूका विपरीत ईमानवालाहरूलाई स्वर्गको सुखद जीवन प्राप्त हुनेछ, यसको वर्णन गऱ्यो तथा स्पष्ट गरिदियो कि यसका पात्र ती मानिसहरू हुनेछन्, जो ईमान ल्याउनुका पश्चात त्यसको माँगलाई पनि पूरा गर्नेछन् अर्थात् पुण्यका कार्य गर्नेछन् तथा स्वयंलाई पापको प्रदूषणबाट पवित्र राख्नेछन् । यसकारण कि ईमान मुखले केही शब्द भनिदिनुको नाम होइन बरु विश्वास तथा कर्मको योगको नाम हो ।

[2]जब फ़िरऔन ईमान पनि ल्याएन तथा इस्राईलका सन्तानलाई स्वतन्त्र गर्न पनि तयार भएन तब अल्लाह तआ़लाले मूसालाई यो आदेश दिनुभयो ।

[3]यसको विस्तृत वर्णन सूरः *अल शुअरामा* आउनेछ कि मूसा अलैहिस्सलामले अल्लाहको आदेशबाट समुद्रमा लट्ठी प्रहार गरे, जसबाट समुद्रमा हिंड्नका लागि सुख्खा मार्ग बन्यो ।

[4]खतरा फिरऔन तथा त्यसको सेनाको तथा भय तथा पानीमा डुब्नुको ।

فَأَتْبَعَهُمْ فِرْعَوْنُ بِجُنُودِهِ فَغَشِيَهُم مِّنَ الْيَمِّ مَا غَشِيَهُمْ ﴿٧٨﴾

(७८) फ़िरऔनले आफ्नो सेना सहित उनलाई पछ्यायो, अनि त समुद्र उनैमाथि छाइहाल्यो जस्तो केही छाउनेवाला थियो ।[1]

وَأَضَلَّ فِرْعَوْنُ قَوْمَهُ وَمَا هَدَىٰ ﴿٧٩﴾

(७९) तथा फ़िरऔनले आफ्नो समुदायलाई विचलनमा पारिदियो तथा सोझो मार्ग देखाएन ।[2]

يَا بَنِي إِسْرَائِيلَ قَدْ أَنجَيْنَاكُم مِّنْ عَدُوِّكُمْ وَوَاعَدْنَاكُمْ جَانِبَ الطُّورِ الْأَيْمَنَ وَنَزَّلْنَا عَلَيْكُمُ الْمَنَّ وَالسَّلْوَىٰ ﴿٨٠﴾

(८०) हे इस्राईलका पुत्रहरू ! (हेर) हामीले तिमीलाई तिम्रा शत्रुबाट मुक्त गरिदियौं तथा तिमीलाई तूर पर्वतका दाहिनेतिरको वचन[3] दियौं तथा तिमीमाथि 'मन्न' तथा 'सलवा' उतार्‍यौं ।[4]

كُلُوا مِن طَيِّبَاتِ مَا رَزَقْنَاكُمْ

(८१) तिमी हामीद्वारा प्रदान गरिएका पवित्र जीविकाहरू खाउ तथा त्यसमा सीमाको उल्लंघन

[1]अर्थात त्यस सुख्खा मार्गमा जब फ़िरऔन तथा त्यसको सेना हिंड्न थाल्यो, तब अल्लाह तआ़लाले समुद्रलाई आदेश दिनुभयो कि पहिलाको स्थितिमा आईहाल, अत: त्यो सुख्खा मार्ग एकैछिनमा पानीका धाराहरूमा परिवर्तित भइहाल्यो तथा फ़िरऔनसहित सम्पूर्ण सेना डुब्यो, غشيهم को अर्थ हो علاهم و أصابهم समुद्रको पानी त्यसमाथि आच्छादित भयो । ما غشيهم यो पुनरावृत्ति भयानकताको वर्णनको लागि हो, अथवा यसको अर्थ हो,"जो प्रसिद्ध तथा परिचित छ ।"

[2]यसकारण कि समुद्रमा जलमग्न हुनु उनको दुर्भाग्य थियो ।

[3] و واعدناكم मा सर्वनाम बहुवचनमा भई सम्बोधित छ, यसको अर्थ यो हो कि मूसा तूर नामक पर्वतमा तिमीलाई अर्थात् तिम्रा प्रतिनिधि पनि आऊन् ताकि तिम्रा समक्ष हामी मूसासित वार्ता गरौं अथवा सर्वनाम बहुवचन यसकारण ल्याइएको छ कि मूसालाई तूर पर्वतमा बोलाउनु इस्राईलका सन्तानका लागि तथा उनीहरूलाई मार्गदर्शन तथा प्रकाश प्रदान गर्नको निम्ति थियो ।

[4] 'मन्न' तथा 'सलवा' को अवतरणको वर्णन सूर: अल-बक़र:को प्रारम्भमा आइसकेको छ । 'मन्न' कुनै स्वादिष्ट मिठो वस्तु थियो जुन आकाशबाट अवतरित हुन्थ्यो तथा 'सलवा' सित तात्पर्य बटेर पंक्षी हो जुन अधिक संख्यामा उनका पास आउँदथे र उनी आवश्यकता अनुसार उनीहरूलाई समातेर पकाउँथे तथा खान्थे ।

وَلَا تَطْغَوْا فِيهِ فَيَحِلَّ عَلَيْكُمْ غَضَبِي ۖ وَمَن يَحْلِلْ عَلَيْهِ غَضَبِي فَقَدْ هَوَىٰ ﴿٨١﴾

नगर ।[१] अन्यथा तिमीमाथि मेरो प्रकोप अवतरित हुनेछ, तथा जसमाथि मेरो प्रकोप अवतरित भयो, त्यो निःसन्देह नाश भयो ।[२]

وَإِنِّي لَغَفَّارٌ لِّمَن تَابَ وَآمَنَ وَعَمِلَ صَالِحًا ثُمَّ اهْتَدَىٰ ﴿٨٢﴾

(८२) तथा निःसन्देह म उनीहरूलाई क्षमा गरिदिनेवाला हूँ, जसले क्षमा माँगे, ईमान (विश्वास) ल्याए, पुण्यका कार्य गरे तथा उचित मार्गमा पनि रहे ।[३]

وَمَا أَعْجَلَكَ عَن قَوْمِكَ يَا مُوسَىٰ ﴿٨٣﴾

(८३) तथा हे मूसा ! तिमीलाई आफ्नो समुदायबाट (निश्चिन्त गरी) कुनचाहिं कुरोले शीघ्र ल्यायो ?

قَالَ هُمْ أُولَاءِ عَلَىٰ أَثَرِي وَعَجِلْتُ إِلَيْكَ رَبِّ لِتَرْضَىٰ ﴿٨٤﴾

(८४) भने ती मानिसहरू पनि मेरो पछि-पछि छन्, तथा मैले हे प्रभु तिमीतिर शीघ्रता यसकारण गरे ताकि तिमी प्रसन्न भईहाल ।[४]

---

[१] طغيان को अर्थ हो 'उल्लघंन गर्नु' । अर्थात् उचित तथा हलाल (ग्राहय) वस्तुहरूलाई छाडि हराम (त्याज्य) तथा निषेध वस्तुहरूतिर उल्लंघन नगर । अथवा अल्लाहका उपकारहरूलाई नकारी अथवा त्यसमाथि अविश्वास गरी अथवा कृतघ्नता गरी सीमाको उल्लंघन नगर, यी सबै भावार्थहरूमाथि طغيان को शब्द चरितार्थ हुन्छ तथा केही विद्वानहरूको भनाई छ कि علاهم و أصاهم को भावार्थ आवश्यकताभन्दा बढी पंक्षी समात्नु अर्थात आवश्यकता अनुसार पंक्षी समात तथा त्यसमा अति नगर ।

[२]दोस्रो अर्थ यो वर्णन गरिएको छ कि त्यो हाविया अर्थात् नरकमा खस्यो । हाविया नरकको तल्लो भाग हो अर्थात् नरकको तल्लो भागको अधिकारी भयो ।

[३]अर्थात् अल्लाहको क्षमाको अधिकारी हुनको निम्ति चारवटा कुराहरू आवश्यक छन् । अविश्वास तथा विमुखताबाट पश्चाताप, ईमान, पुण्यका कार्य एवं सत्यमार्गमा हिंडिराख्नु अर्थात सोझो मार्गमा हिंड्दै त्यसलाई मृत्यु आओस्, अन्यथा स्पष्ट कुरो छ कि क्षमा माँग्नु तथा ईमानका पश्चात यदि उसले फेरि शीघ्र तथा कुफ्रको मार्ग अपनायो, यहाँसम्मकि उसको मृत्यु भइहाल्यो तथा त्यो अनिष्ठा तथा मिश्रणवादमा नै रहयो, त अल्लाहको क्षमाको सट्टा यातनाको अधिकारी हुनेछ ।

[४]समुद्र तरे पश्चात मूसा अलैहिस्सलामले इस्राईलका सम्मानित व्यक्तिहरूलाई आफ्नो साथमा लिई तूर पर्वततिर हिंड्यो, तथा प्रभुसित मिलनको उत्सुकतामा साथीहरूलाई पछाडी छाडेर तूर पर्वतमा एक्लै पुगे । प्रश्न गर्दा उत्तर दिए, मलाई त

قَالَ فَإِنَّا قَدْ فَتَنَّا قَوْمَكَ مِنْۢ بَعْدِكَ وَأَضَلَّهُمُ ٱلسَّامِرِيُّ ﴿٨٥﴾

(८५) भन्यो हामीले तिम्रा समुदायलाई तिम्रो पछाडी परीक्षणमा पारिदियौं तथा उनीहरूलाई 'सामरीले' विचलन (कुमार्ग) मा पारिदिए ।[1]

فَرَجَعَ مُوسَىٰٓ إِلَىٰ قَوْمِهِۦ غَضْبَٰنَ أَسِفًا ۚ قَالَ يَٰقَوْمِ أَلَمْ يَعِدْكُمْ رَبُّكُمْ وَعْدًا حَسَنًا ۚ أَفَطَالَ عَلَيْكُمُ ٱلْعَهْدُ أَمْ أَرَدتُّمْ أَن يَحِلَّ عَلَيْكُمْ غَضَبٌ مِّن رَّبِّكُمْ فَأَخْلَفْتُم مَّوْعِدِى ﴿٨٦﴾

(८६) तब मूसा अत्याधिक क्रोधित तथा शोकग्रस्त भई वापस फर्के, तथा भन्नथाले कि हे मेरा समुदायका मानिसहरू ! के तिमीसित तिम्रो प्रभुले राम्रो वाचा गरेको थिएन ?[2] के त्यसको अवधि तिमीहरूलाई लामो प्रतीत भयो ?[3] अथवा तिम्रो विचार नै यो हो कि तिमीमाथि तिम्रो प्रभुको प्रकोप उत्रोस् । तसर्थ तिमीले मेरो वचन भङ्ग गर्‍यौ ।[4]

तिम्रो प्रसन्नताको चाहना तथा त्यसको शीघ्रता थियो । ती मानिसहरू त मेरा पछि-पछि आइराखेका छन् । केही विद्वानहरूका निकट यसको अर्थ यो होइन कि मेरो पछाडी आइराखेका छन्, बरु यो हो कि उनीहरू मेरो पछाडी तूर पर्वतकै निकट छन् तथा त्यहाँ मेरो वापसीको प्रतीक्षामा छन् ।

[1]आदरणीय मूसाका पश्चात 'सामरी' नामक व्यक्तिले इस्राईलका सन्तानलाई बाछो पूज्नमा लगाइदियो जसको सूचना अल्लाह तआलाले तूरमा नै मूसालाई दियो कि 'सामरी' ले तिम्रा अनुयायीहरूलाई विचलित गरिदियो । परीक्षामा पार्ने कुरोलाई अल्लाहले आफूसित सम्बन्धित गरेको छ यसकारण कि उत्पत्तिकार त्यही हो अन्यथा विचलित पार्नुको कारण त 'सामरी' नै थियो जस्तो कि أضلهم السامري (अज़्लमहूस्सामरी) बाट स्पष्ट छ ।

[2]यसबाट तात्पर्य स्वर्ग अथवा विजयको वचन हो यदि उनीहरू धर्ममा स्थित रहे अथवा तौरात प्रदान गर्नुको वचन हो, जसको लागि उनलाई तूर पर्वतमा बोलाइएको थियो ।

[3]के त्यस प्रतिज्ञाको अवधि धेरै दीर्घ भइसकेको थियो कि तिमी बिर्सिहाल्यौ तथा बाछोको पूजा प्रारम्भ गरिदियौ ।

[4]समुदायले मूसासित प्रतिज्ञा गरेको थियो कि उनी तूर पर्वतबाट फर्किआउने बेलासम्म उनीहरू अल्लाहको इबादत तथा आज्ञा पालनमा स्थिर रहने छन् अथवा यो प्रतिज्ञा थियो कि हामी पनि तूर पर्वतमा तपाईंको पछि-पछि आइराखेका छौं । तर मार्गमा नै रूकेर उनीहरूले बाछोको पूजा प्रारम्भ गरिदिए ।

قَالُوا۟ مَآ أَخْلَفْنَا مَوْعِدَكَ بِمَلْكِنَا وَلَٰكِنَّا حُمِّلْنَآ أَوْزَارًا مِّن زِينَةِ ٱلْقَوْمِ فَقَذَفْنَٰهَا فَكَذَٰلِكَ أَلْقَى ٱلسَّامِرِىُّ ﴿٨٧﴾

(८७) (उनीहरूले) उत्तर दिए कि हामीले आफ्नो अधिकारबाट तपाईंसित वचन भङ्ग गरेनौं ।[1] बरु हामीमाथि समुदायका जुन आभूषण लादिएका थिए, तिनलाई हामीले बिसायौं, तथा त्यसैप्रकार सामरीले पनि राख्यो ।

فَأَخْرَجَ لَهُمْ عِجْلًا جَسَدًا لَّهُۥ خُوَارٌ فَقَالُوا۟ هَٰذَآ إِلَٰهُكُمْ وَإِلَٰهُ مُوسَىٰ فَنَسِىَ ﴿٨٨﴾

(८८) अनि उसले मानिसहरूका लागि एउटा बाछो निकाल्यो अर्थात् बाछोको मूर्ति जसको गाईको जस्तो आवाज थियो अनि भने कि यही तिम्रो पनि पूज्य हो,[2] तथा मूसाको पनि, तर मूसा बिर्सिसकेको छ ।

أَفَلَا يَرَوْنَ أَلَّا يَرْجِعُ إِلَيْهِمْ قَوْلًا وَلَا يَمْلِكُ لَهُمْ ضَرًّا وَلَا نَفْعًا ﴿٨٩﴾

(८९) के यी विचलित भएका मानिसहरू यो पनि देख्दैनन् कि त्यो त उनको कुरोको उत्तर पनि दिन सक्दैन तथा न उनका कुनै राम्रा-नराम्राको अधिकार राख्दछ ?[3]

---

[1]अर्थात् हामीले अधिकारले यो कार्य गरेनौं बरु यो दोष हामीबाट विवशतामा भयो । अगाडी यसको कारण वर्णन गरे ।

[2] زينة बाट आभूषण तथा القوم बाट फ़िरऔनका अनुयायी तात्पर्य हुन् । भनिन्छ कि यो आभूषण उनले फ़िरऔनीहरूबाट सापट लिएका थिए यसैकारण उनीहरूलाई وزر- أوزار (बोझ) को बहुवचन भनिएको छ, किनभने यो उनको लागि उचित थिएनन्, अतः उनीहरूले एकत्रित गरी एउटा खाल्डोमा हालिदिए, 'सामरी'ले पनि (जो मुसलमानहरूमा केही विचलित भएको समूहहरूको जस्तो) विचलित भएको थियो, केही हाल्यो (यो त्यो माटो थियो जसको स्पष्टीकरण अगाडी छ) अनि त्यसले सबै आभूषणहरूलाई भस्म पारी एकप्रकारको बाछो बनायो जसमा हावा भित्र-बाहिर आउने-जानेले एकप्रकारको ध्वनि उत्पन्न हुन्थ्यो । यस ध्वनिबाट उसले इस्राईलका सन्तानलाई विचलित गऱ्यो कि मूसा त विचलित भइसकेका छन् किनकि उनी अल्लाहसित भेट्नका लागि तूर पर्वतमा गएका छन्, जबकि तिम्रो र मूसाको पूज्य यो हो ।

[3]अल्लाह तआलाले उनको मूर्खता तथा कुबुद्धिको स्पष्टीकरण गर्दै आदेश गऱ्यो कि यी बुद्धिका अन्धाहरूलाई यति पनि थाहा लागेन कि यो बाछो कुनै उत्तर दिनसक्छ, न लाभ-हानि पुऱ्याउन सामर्थ्य राख्दछ । जबकि पूज्य त त्यही हुनसक्छ जो

وَلَقَدْ قَالَ لَهُمْ هَٰرُونُ مِن قَبْلُ يَٰقَوْمِ إِنَّمَا فُتِنتُم بِهِۦ ۖ وَإِنَّ رَبَّكُمُ ٱلرَّحْمَٰنُ فَٱتَّبِعُونِى وَأَطِيعُوٓا۟ أَمْرِى ﴿٩٠﴾

(९०) तथा हारूनले यसभन्दा पूर्व नै उनीहरूसित भनिदिएका थिए कि हे मेरो समुदायको मानिसहरू ! यस बाछोबाट त तिम्रो परीक्षण गरिएको छ, तिम्रो वास्तविक प्रभु त अल्लाह दयालु नै हो तसर्थ तिमी सबै मेरो अनुकरण गर तथा मेरो कुरो मान्दै जाउ ।[1]

قَالُوا۟ لَن نَّبْرَحَ عَلَيْهِ عَٰكِفِينَ حَتَّىٰ يَرْجِعَ إِلَيْنَا مُوسَىٰ ﴿٩١﴾

(९१) (उनीहरूले) उत्तर दिए कि मूसा आउन्जेलसम्म हामी त यसैका पुरोहित रहनेछौं ।[2]

قَالَ يَٰهَٰرُونُ مَا مَنَعَكَ إِذْ رَأَيْتَهُمْ ضَلُّوٓا۟ ﴿٩٢﴾

(९२) (मूसा) भन्नलागे हे हारून ! यिनीहरूलाई विचलित भइराखेको देख्दा तिमीलाई कुन कुरोले रोकेको थियो ?

أَلَّا تَتَّبِعَنِ ۖ أَفَعَصَيْتَ أَمْرِى ﴿٩٣﴾

(९३) कि तिमी मेरो पछि आएनौ, के तिमी पनि मेरो आज्ञाको अवज्ञाकारी बनिहाल्यौ ।

قَالَ يَبْنَؤُمَّ لَا تَأْخُذْ بِلِحْيَتِى وَلَا بِرَأْسِىٓ ۖ إِنِّى خَشِيتُ أَن تَقُولَ

(९४) (हारूनले) भने हे मेरी आमाका छोरा ! मेरो दाह्री न समात तथा टाउकोका कपाल नतान, मलाई त मात्र यो विचार आयो कि ।[3] कहीं

प्रत्येक व्यक्तिको विन्ती सुन्न, लाभ-हानि पुऱ्याउन तथा आवश्यकताको पूर्तिको सामर्थ्य राख्दछ ।

[1]आदरणीय हारूनले यो त्यसबेला भने जब यो समुदाय सामरीको पछाडी लागेर बाछोको पूजा गर्नमा लाग्यो ।

[2]इस्राईलीहरूलाई यो गौशाला यति रूचिकर लाग्यो कि आदरणीय हारून अलैहिस्सलामको कुरोको पनि चिन्ता गरेनन् तथा त्यसको सम्मान तथा पूजा छाड्नबाट इन्कार गरिदिए ।

[3]आदरणीय मूसा समुदायलाई मूर्तिपूजा गरिराखेको देखेर अत्याधिक क्रोधित थिए तथा ठान्दथे कि यसमा उनका भाइ हारूनको जसलाई आफ्नो प्रतिनिधि बनाएर गएका थिए ढिलोपनाको पनि हस्तक्षेप छ, यसकारण तीब्र क्रोधमा हारूनको दाह्री तथा टाउकोको कपाल समातेर तिनलाई हल्लाउन तथा सोध्न प्रारम्भ गरे, जसमाथि आदरणीय हारूनले उनलाई कठोर व्यवहार गर्नबाट रोके ।

فَرَّقْتَ بَيْنَ بَنِىٓ إِسْرَٰٓءِيلَ وَلَمْ تَرْقُبْ قَوْلِى ﴿٩٤﴾

तपाईं यो नभन्नुस् कि तिमीले इस्राईलको सन्तानमा मतभेद उत्पन्न गरिदियौ तथा मेरो कुराको प्रतीक्षा गरेनौं ।[1]

قَالَ فَمَا خَطْبُكَ يَٰسَٰمِرِىُّ ﴿٩٥﴾

(९५) (मूसाले) सोधे, 'सामरी' तिम्रो के समाचार छ ?

قَالَ بَصُرْتُ بِمَا لَمْ يَبْصُرُوا۟ بِهِۦ فَقَبَضْتُ قَبْضَةً مِّنْ أَثَرِ ٱلرَّسُولِ فَنَبَذْتُهَا وَكَذَٰلِكَ سَوَّلَتْ لِى نَفْسِى ﴿٩٦﴾

(९६) (उसले) उत्तर दियो कि मलाई त्यो कुरो देखियो, जुन उनलाई देखिएन, त मैले अल्लाहद्वारा पठाइएका पद-चिन्हहरूबाट एक मुट्ठी भरें, त्यसलाई त्यसमा हालिदिएँ ।[2] यसैप्रकार मेरो हृदयले मेरो लागि यो कुरा बनाइदियो ।

---

[1]सूरः आराफमा आदरणीय हारूनको यो कुरो उद्धृत छ कि समुदायले मलाई निर्बल ठान्यो तथा मेरो हत्याको पछाडी परिहाले । (आयत-१४२) जसको अर्थ यो हो कि आदरणीय हारूनले आफ्नो कर्तव्य पूर्णरूपले निर्वाह गरे तथा बाछोको पूजा रोक्नमा शिथिलता तथा आलस्यले काम लिएनन् । परन्तु परिस्थितिहरूलाई त्यस सीमासम्म जान दिएनन् जसबाट गृहयुद्ध प्रारम्भ होस् किनभने हारूनको हत्याको अर्थ फेरि उनका अनुयायी तथा विरोधीहरूमा आपसमा अत्याधिक रक्तपात हुन्थ्यो तथा इस्राईलको वंश स्पष्टरुपले दुई गुटहरूमा विभाजित हुनपुग्थ्यो, जुन एक-अर्काका प्राण लिन खोज्थे । आदरणीय मूसा त्यहाँ स्वयं उपस्थित थिएनन्, यसकारण यस परिस्थितिबाट अन्जान थिए, यसैकारण आरदणीय हारूनलाई उनले कटुवचन भने । तर पछि स्पष्टीकरण पश्चात मूल अपराधितिर मोडिए । यसकारण यो भावार्थ ठीक छैन (जुन केही मानिसहरू गर्दछन्) कि मुसलमानहरूको एकता तथा अखण्डताको लागि मूर्तिपूजन तथा असत्य कुराहरूलाई पनि सहन गर्नुपर्छ । किनभने आरदणीय हारूनले न यस्तो गरेका छन्, न उनको कथनको यो अर्थ हो ।

[2]अधिकांश व्याख्याकारहरूले الرسول बाट तात्पर्य जिब्रील लिएका छन् तथा अर्थ यो वर्णन गरेका छन् कि जिब्रीलको घोडालाई गइराखेको सामरीले देख्यो तथा त्यसको पदचिन्हहरूको मुनिको माटो उसले सम्हालेर राख्यो जसमा अप्राकृतिक प्रभाव थिए । यस माटोलाई उसले पग्लेका आभूषणहरू अथवा बाछोमा हाल्यो तब त्यसबाट एक प्रकारको ध्वनि निस्कन प्रारम्भ भयो जुन उनको विचलनको कारण भयो ।

قَالَ فَاذْهَبْ فَإِنَّ لَكَ فِي الْحَيٰوةِ أَنْ تَقُولَ لَا مِسَاسَ وَإِنَّ لَكَ مَوْعِدًا لَّنْ تُخْلَفَهُ وَانْظُرْ إِلَىٰ إِلٰهِكَ الَّذِي ظَلْتَ عَلَيْهِ عَاكِفًا لَّنُحَرِّقَنَّهُ ثُمَّ لَنَنْسِفَنَّهُ فِي الْيَمِّ نَسْفًا ﴿٩٧﴾

(९७) भने, ठीक छ, जा सांसारिक जीवनमा तेरो दण्ड यही हो कि तिमी भन्दै गर "मलाई नछुनु"[1] तथा एउटा अन्य वचन पनि तिम्रो साथमा छ, जुन तिमीबाट कदापि जानेछैन,[2] तथा अब तिमी आफ्नो यस देवतालाई पनि हेर्नु, जसमाथि पुरोहित बनेको थियो। हामीले यसलाई जलाइदिनेछौं अनि त्यसलाई नदीमा टुक्रा-टुक्रा गरी उडाइदिनेछौं।[3]

إِنَّمَا إِلٰهُكُمُ اللّٰهُ الَّذِي لَا إِلٰهَ إِلَّا هُوَ وَسِعَ كُلَّ شَيْءٍ عِلْمًا ﴿٩٨﴾

(९८) निःसन्देह तिमी सबैको सत्य पूज्य मात्र अल्लाह नै हो, त्यसको अतिरिक्त कोही पूज्य छैन । त्यसको ज्ञान सबै कुराहरूमा प्रसारित छ ।

---

[1]अर्थात् आजीवन तिमी यही भनिरहनेछौ कि मबाट टाढा रह, मलाई नछोउ, यसकारण कि उसलाई स्पर्श गर्नासाथ स्पर्श गर्नेवाला पनि तथा यो सामरी पनि ज्वरोले ग्रसित हुन्थे । यसकारण जब कुनै मानिसलाई देख्दथ्यो तब तुरून्तै कराइहाल्थ्यो कि لا مساس । भनिन्छ कि पछि यो मनुष्यहरूको वस्तीबाट निस्केर वनमा गइहाल्यो, जहाँ पशुहरूका साथ त्यसको जीवन व्यतीत भयो तथा यसप्रकार त्यो शिक्षाको नमूना बनिरहयो अर्थात् मानिसहरूलाई विचलित पार्नको लागि जुन व्यक्ति जति अधिक प्रयत्न छल तथा कपट अपनाउनेछ, संसार तथा आख़िरतमा त्यसको दण्ड पनि त्यसै हिसाबले तीव्र तथा अत्यन्त भयानक हुनेछ ।

[2]अर्थात् आख़िरतको यातना यसका अतिरिक्त छ जो जसरी पनि भोग्नुपर्नेछ ।

[3]यसबाट ज्ञात भयो कि मूर्तिपूजाको चिन्ह समाप्त गर्नु बरु त्यसको अस्तित्वको चिन्ह मेटिदिनु, चाहे त्यसको सम्बन्ध जतिसुकै पवित्र व्यक्तिसित होस्, अपमान होइन, जस्तो कि अहले विदअत, समाधिपूजक, तथा ताज़ियापूजक भन्दछन्, बरु यो त एकेश्वरवादको उद्देश्य तथा धार्मिक सम्मानको कुरा हो । जस्तो यस घटनामा त्यस أثر الرسول लाई देखिएन जसबाट प्रकट भएको अध्यात्मिक प्रकाशको दर्शन पनि गरियो, त्यसको उपरान्त पनि त्यसको चिन्ता गरिएन यसकारण कि त्यो मूर्तिपूजनको साधन बनिहाल्यो ।

كَذَٰلِكَ نَقُصُّ عَلَيْكَ مِنْ أَنۢبَآءِ مَا قَدْ سَبَقَ ۚ وَقَدْ ءَاتَيْنَٰكَ مِن لَّدُنَّا ذِكْرًا ﴿٩٩﴾

(९९) यसैप्रकार हामी तिम्रा[1] समक्ष पूर्वका विगत घटनाहरूको वर्णन गर्दछौं तथा निःसन्देह हामीले तिमीलाई आफ्नो तर्फबाट निर्देशन गरिसकेका छौं ।[2]

مَّنْ أَعْرَضَ عَنْهُ فَإِنَّهُۥ يَحْمِلُ يَوْمَ ٱلْقِيَٰمَةِ وِزْرًا ﴿١٠٠﴾

(१००) यसबाट जो मुख फर्काउनेछ,[3] त्यसले निःसन्देह कयामत (प्रलय) का दिन आफ्नो गह्रुङ्गो बोझ बोकेको हुनेछ ।[4]

خَٰلِدِينَ فِيهِ ۖ وَسَآءَ لَهُمْ يَوْمَ ٱلْقِيَٰمَةِ حِمْلًا ﴿١٠١﴾

(१०१) जसमा सधैं रहनेछ,[5] तथा उनका लागि क़ेयामतको दिन (ठूलो) नराम्रो बोझ छ ।

يَوْمَ يُنفَخُ فِى ٱلصُّورِ ۚ وَنَحْشُرُ

(१०२) जुन दिन सुर (नरसिंघा)[6] फुकिनेछ तथा पापीहरूलाई हामीले त्यस दिन

---

[1]अर्थात् जसरी हामीले फ़िरऔन तथा मूसाको कथाको वर्णन गरेका छौं, त्यसरी नै पूर्वका नबीहरूका घटना हामी तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) का लागि वर्णन गरिराखेका छौं ताकि तपाईं तिनीबाट सूचित रहनुहोस्, तथा तिनमा जो शिक्षा प्राप्त गर्नुका पक्षमा छन्, तिनीहरूलाई मानिसहरूका समक्ष प्रकट गर्नुहोस् ताकि मानिसहरू त्यसको प्रकाशमा उचित व्यवहार अपनाउन सकून् ।

[2] ذكر (ज़िक्र) (स्मृति) बाट तात्पर्य क़ुरआन करीम हो जसबाट भक्त आफ्नो प्रभुलाई स्मरण गर्दछ, मार्गदर्शन प्राप्त गर्दछ तथा मोक्ष तथा आज्ञापालनको मार्ग अपनाउँछ ।

[3]अर्थात् यसमाथि ईमान ल्याउने छैन तथा जे-जति लिखित छ, त्यस अनुसार कर्म गर्ने छैन ।

[4]अर्थात् महापाप यसकारण कि त्यसको कर्मपत्र पुण्यबाट शून्य तथा नराम्रा कुराहरूले भरिएको हुनेछ ।

[5]जसबाट त्यो बच्नसक्ने छैन, न भाग्न नै सक्नेछ ।

[6] صور बाट तात्पर्य त्यो قرن (नरसिंघा) हो जसमा इस्राफ़ील अल्लाहको आदेशले फुक्नेछन् तब क़ेयामत आइहाल्नेछ (मुसनद अहमद-२/१९१) एउटा अन्य हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएको छ, "इस्राफ़ील नरसिंघा मुख नजीक राखेर उभिएका छन्, निदार झुकेको छ, प्रभुको आदेशको प्रतीक्षामा छन् कि जतिखेर उनलाई आदेश दिईन्छ उनले फुक्नेछन् ।" (तिर्मिज़ी अबवाब सिफ़तिल क़ियामः,बाबु माजाअ फिस्सूर) आदरणीय इस्राफ़ीलको पहिलो फूँकबाट सबै मर्नेछन्, दोस्रो फूँकमा अल्लाहका आदेशले सबै मानिसहरु पुनः जीवित भई

الْمُجْرِمِينَ يَوْمَئِذٍ زُرْقًا ﴿١٠٢﴾

भयका कारण) निलो-पहेंलो आँखाका साथ घेरेर ल्याउनेछौं ।

يَتَخَافَتُونَ بَيْنَهُمْ إِن لَّبِثْتُمْ إِلَّا عَشْرًا ﴿١٠٣﴾

(१०३) उनीहरू एक-आपसमा कानेखुसी गरिराखेका हुनेछन्[1] कि हामी त (संसारमा) मात्र दस दिन नै रहयौं ।

نَّحْنُ أَعْلَمُ بِمَا يَقُولُونَ إِذْ يَقُولُ أَمْثَلُهُمْ طَرِيقَةً إِن لَّبِثْتُمْ إِلَّا يَوْمًا ﴿١٠٤﴾

(१०४) उनीहरू जे-जति भनिराखेका छन्, त्यसको वास्तविकताको सूचना हामीलाई छ, तिनीहरूमा सबैभन्दा उत्तम मार्ग[2] वाला भनिराखेको हुनेछ कि तिमी मात्र एक दिन रहयौ ।

وَيَسْأَلُونَكَ عَنِ الْجِبَالِ فَقُلْ يَنسِفُهَا رَبِّي نَسْفًا ﴿١٠٥﴾

(१०५) उनीहरू तपाईंसित पर्वतहरूका सम्बन्धमा प्रश्न गर्दछन् त (तपाईं) भनिदिनुस् कि तिनलाई मेरो प्रभुले कण-कण पारी उडाइदिनेछ ।

فَيَذَرُهَا قَاعًا صَفْصَفًا ﴿١٠٦﴾

(१०६) तथा धर्तीलाई समतल सफा मैदान पारी छाडिनेछ ।

---

हश्रका मैदानमा एकत्रित हुनेछन् । आयतमा यही दोस्रो फूँक तात्पर्य छ ।

[1]भयको तीव्रता तथा त्रासका कारण एक-अर्कासित विस्तारै कानेखुसीमा कुरा गर्नेछन् ।

[2]अर्थात् सबभन्दा अधिक बुद्धिमान तथा चतुर । अर्थात् संसारको जीवन उनीहरूलाई केही दिन बरु एक-दुई क्षणको प्रतीत हुनेछ जसरी अन्य स्थानमा अल्लाह तआलाको आदेश छ :

﴿وَيَوْمَ تَقُومُ السَّاعَةُ يُقْسِمُ الْمُجْرِمُونَ مَا لَبِثُوا غَيْرَ سَاعَةٍ﴾

"जुन दिन क़ियामत घटित हुनेछ, काफ़िर कसम खाएर भन्नेछन् उनीहरू (संसारमा) एक क्षणभन्दा अधिक रहेनन् ।" (सूर: अल-रूम-५५)

यही विषय अन्य विभिन्न स्थानहरूमा वर्णन गरिएको छ । जस्तै सूर: फ़ातिर-३७, अल-मोमिनून-११२ देखि ११४ सम्म, सूर: अल-नाज़िआत आदि । अर्थ यो हो कि आख़िरतका स्थाई तथा अनन्त जीवनको अपेक्षा दुनियाँको अनन्तलाई प्रधानता नदिइयोस् ।

لَا تَرٰى فِيْهَا عِوَجًا وَّلَاۤ اَمْتًا ﴿١٠٧﴾

(१०७) जसमा न त कहीं मोड देखिनेछ, न अग्लो-होचो ।

يَوْمَئِذٍ يَّتَّبِعُوْنَ الدَّاعِيَ لَا عِوَجَ لَهٗ ۚ وَخَشَعَتِ الْاَصْوَاتُ لِلرَّحْمٰنِ فَلَا تَسْمَعُ اِلَّا هَمْسًا ﴿١٠٨﴾

(१०८) जुन दिन मानिसहरू पुकार्नेवालाका पछाडी हिंड्नेछन्[1] जसमा कुनै त्रुटि हुनेछैन ।[2] तथा अल्लाह दयालुका समक्ष सबै आवाजहरू मसिना हुनेछन्, तिमी विस्तारै कानेखुसी गरेका बाहेक अरु केही सुन्ने छैनौ ।[3]

يَوْمَئِذٍ لَّا تَنْفَعُ الشَّفَاعَةُ اِلَّا مَنْ اَذِنَ لَهُ الرَّحْمٰنُ وَرَضِيَ لَهٗ قَوْلًا ﴿١٠٩﴾

(१०९) त्यस दिन सिफारिश कुनै काम आउने छैन, र त्यसबाहेक जसलाई रहमान (दयालु) आदेश दिन्छ तथा त्यसको कुरालाई मन पराउँछ ।[4]

يَعْلَمُ مَا بَيْنَ اَيْدِيْهِمْ وَمَا خَلْفَهُمْ وَلَا يُحِيْطُوْنَ بِهٖ عِلْمًا ﴿١١٠﴾

(११०) जे-जति उनका अगाडी तथा पछाडी छ, त्यसलाई (अल्लाह नै) जान्दछ, सृष्टिको ज्ञान त्यसलाई

---

[1]अर्थात् जुन दिन अग्ला-होंचा पर्वत, घाटीहरु, गगनचुम्बी भवनहरू, सबै समाप्त हुनेछन्, समुद्र तथा नदी सुक्नेछन् तथा सम्पूर्ण धर्ती समतल मैदान बन्नेछ । अनि एउटा आवाज आउनेछ, जसका पछाडी सबै मानिसहरू लाग्नेछन् अर्थात जतातिर त्यो बोलाउनेवालाले बोलाउनेछ, जानेछन् ।

[2]अर्थात् यस बोलाउनेवालाबाट यताउता हुने छैनन् ।

[3]अर्थात् पूर्ण शान्ति हुनेछ, केवल पदचाप तथा कानेखुसीबाहेक केही सुनिने छैन ।

[4]अर्थात् त्यस दिन कसैको सिफारिश कसैलाई कुनै लाभ पुऱ्याउने छैन, तर ती बाहेक जसको सिफारिशको लागि आज्ञा दिनेछ तथा त्यो पनि प्रत्येकको सिफारिश गर्नेछैनन्, बरु केवल उनको सिफारिश गर्नेछन् जसको सिफारिश अल्लाह मन पराउँछ तथा यी कुन मानिसहरू हुनेछन ? केवल एकेश्वरवादका अनुयायी, जसका लागि सिफारिश गर्न अल्लाह तआलाले आज्ञा दिनेछ । यो विषय कुरआनमा विभिन्न स्थानहरूमा वर्णन गरिएको छ जस्तै सूर: नज्म-२६, सूर: अम्बिया-२८, सूर: सबा-२३, सूर: अन-नबा-३८ तथा आयतुल कुर्सी ।

घेर्न सक्दैन ।[1]

(१११) तथा सबै अनुहार त्यस चिरञ्जीवी (अनादि नित्य) तथा चिरस्थाई अल्लाहका समक्ष विनम्रतापूर्वक अनुहार झुकेका हुनेछन्, निःसन्देह त्यो असफल भयो जसले अत्याचार बोक्यो ।[2]

وَعَنَتِ الْوُجُوهُ لِلْحَيِّ الْقَيُّومِ ۖ وَقَدْ خَابَ مَنْ حَمَلَ ظُلْمًا ﴿١١١﴾

(११२) तथा जसले पुण्यका कार्य गरे एवं ईमान्दार पनि रहे त न उसलाई अन्यायको भय हुनेछ, न अधिकार हननको ।[3]

وَمَنْ يَعْمَلْ مِنَ الصَّالِحَاتِ وَهُوَ مُؤْمِنٌ فَلَا يَخَافُ ظُلْمًا وَلَا هَضْمًا ﴿١١٢﴾

[1]यसभन्दा पूर्वको आयतमा सिफारिशको जुन नियम भनिएका छन्, यसमा त्यसको कारण तथा लक्षण वर्णन गरिएको छ कि अल्लाहका अतिरिक्त कसैलाई पनि कुनै पनि कुराको पूरा ज्ञान छैन कि को कति ठूलो अपराधी छ ? तथा त्यो यस कुराको अधिकारी छ पनि अथवा छैन कि त्यसको सिफारिश गर्न सकियोस् ? यसकारण यस कुराको निर्णय पनि अल्लाह तआला नै गर्नेछ कि कुन-कुन मानिसहरू नबी तथा अन्य प्रमाणित सिफारिशकर्ताहरुको सिफारिशका अधिकारी छन् । किनभने प्रत्येक व्यक्तिको अपराधको स्थिति तथा प्रकारलाई अल्लाहका अतिरिक्त कोही जान्दैन तथा न जान्न नै सक्छ ।

[2]यसकारण कि त्यस दिन अल्लाह तआला पूर्णतः न्याय गर्नेछ तथा प्रत्येक अधिकारवालालाई त्यसको अधिकार दिलाउने छ । यहाँसम्मकि एक सिङ भएको बाखाले सिङ नभएको बाखामथि अत्याचार गरेको हुनेछ, त त्यसको पनि बदला दिलाउनेछ ।(सहीह मुस्लिम किताबुल बिर्रे, मुसनद अहमद भाग-२ पृष्ठ-३५) यसकारण नबी सल्लल्लाहु अलैहि वसल्लमले यसै हदीसमा यो भन्नुभएछ «لَتُؤَدُّنَّ الْحُقُوقَ إِلَى أَهْلِهَا» "प्रत्येक अधिकारवालालाई त्यसको अधिकार दिईहाल अन्यथा कयामतको दिन दिनुपर्नेछ ।" एक अन्य हदीसमा भन्नुभयो : «إِيَّاكُمْ وَالظُّلْمَ؛ فَإِنَّ الظُّلْمَ ظُلُمَاتٌ يَوْمَ الْقِيَامَةِ» "अत्याचार गर्नबाट बाँच, किनकि अत्याचार कयामतका दिन अन्धकारको कारण हुनेछ ।"(सहीह मुस्लिम उपरोक्त किताब, बाब तहरीमुज़्जुल्म) सबभन्दा असफल व्यक्ति त्यो हुनेछ जसले मूर्तिपूजाको भारी पनि आफूमाथि बोकेको हुनेछ, यसकारण कि अनेकेश्वरवाद महाअत्याचार पनि हो तथा क्षमाको योग्य पनि छैन ।

[3]अन्याय यो हो कि त्यसमाथि अरुका पापहरूका बोझ पनि हालिदिइयोस् तथा अधिकार हनन यो हो कि पुण्यको प्रतिफल कम दिइयोस् । यी दुबै कुरो त्यहाँ हुने छैनन् ।

وَكَذَٰلِكَ أَنزَلْنَٰهُ قُرْءَانًا عَرَبِيًّا وَصَرَّفْنَا فِيهِ مِنَ ٱلْوَعِيدِ لَعَلَّهُمْ يَتَّقُونَ أَوْ يُحْدِثُ لَهُمْ ذِكْرًا ﴿١١٣﴾

(११३) तथा यसैप्रकार हामीले तिमीमाथि अरबी (भाषामा) कुर्‌आन उतारेका छौं तथा विभिन्न प्रकारले त्यसमा भयका वर्णन गरेका छौं ताकि मानिसहरू परहेजगार बनून्[1] अथवा उनका हृदयमा सोच-विचार उत्पन्न गरोस् ।[2]

فَتَعَٰلَى ٱللَّهُ ٱلْمَلِكُ ٱلْحَقُّ ۗ وَلَا تَعْجَلْ بِٱلْقُرْءَانِ مِن قَبْلِ أَن يُقْضَىٰٓ إِلَيْكَ وَحْيُهُۥ ۖ وَقُل رَّبِّ زِدْنِى عِلْمًا ﴿١١٤﴾

(११४) यसप्रकार अल्लाह (तआ़ला) सर्वश्रेष्ठ सत्य एवं वास्तविक स्वामी हो ।[3] तिमी कुर्‌आन पढ्नमा शीघ्रता नगर यसभन्दा पूर्व कि तिमीतिर जुन प्रकाशना (वह्य) गरिन्छ त्यो पूर्ण गरियोस् ।[4] तथा यो भन कि प्रभु ! मेरो ज्ञान बढाउ ।[5]

[1]अर्थात् पाप, निषेधित तथा कुकर्म गर्नबाट रोकियोस् ।

[2]अर्थात् आज्ञा पालन तथा सामीप्य प्राप्त गर्नको रूचि अथवा विगत समुदायहरूको दुर्दशा तथा घटनाहरूबाट शिक्षा प्राप्त गर्नुको भावना तिनीहरूमा उत्पन्न गरोस् ।

[3]जसको वचन तथा चेतावनी सत्य छ, स्वर्ग-नरक सत्य छ, तथा त्यसको प्रत्येक कुरा सत्य छ ।

[4]जिब्रील जब प्रकाशना लिएर आउँथे तथा सुनाउँथे त नबी सल्लल्लाहु अलैहि वसल्लम पनि छिटो-छिटो सँगैसँगै पढ्दै जानुहुन्थ्यो कि कहीं भाग नबिर्सियून्, अल्लाह तआ़लाले त्यसबाट मनाही गऱ्यो तथा भन्यो कि ध्यानपूर्वक पहिले प्रकाशना सुन, त्यसपछि स्मरण गराउनु तथा हृदयमा बसाल्ने कुरो हाम्रो कार्य हो, जस्तो कि सूर: क़ियाम:मा आउनेछ ।

[5]अर्थात् अल्लाह तआ़लासित ज्ञानको अधिकताको लागि प्रार्थना गर्दैरहनुस्, यसमा धर्मगुरुहरूका लागि पनि शिक्षा छ कि धार्मिक निर्णयमा पूरा सोध तथा विचारले कार्य गरून्, शीघ्रताबाट बचून् तथा ज्ञानका अधिकताका साधनहरूलाई अपनाउनमा कमी नगरून् । यसका अतिरिक्त ज्ञानबाट तात्पर्य कुर्‌आन तथा हदीसको ज्ञान हो । कुर्‌आनमा यसैलाई ज्ञान भनिएको छ तथा तिनका जानकारलाई विद्वान (आलिम) । अन्य कुराहरूका ज्ञान, जुन मनुष्य जीवनयापनका लागि प्राप्त गर्दछ, ती सबै कला हुन्, शिल्प तथा उद्योग हुन् । नबी सल्लल्लाहु अलैहि वसल्लम जुन ज्ञानका निम्ति गर्नुहुन्थ्यो, त्यो प्रकाशना तथा रिसालतको नै ज्ञान छ जुन

وَلَقَدْ عَهِدْنَآ إِلَىٰٓ ءَادَمَ مِن قَبْلُ فَنَسِيَ وَلَمْ نَجِدْ لَهُۥ عَزْمًا ﴿١١٥﴾

(११५) तथा हामीले आदमलाई प्रथम नै बलपूर्वक आदेश दिएका थियौं, तर त्यसले बिर्सिहाल्यो तथा हामीले त्यसमा कुनै निश्चय पाएनौं ।[1]

وَإِذْ قُلْنَا لِلْمَلَٰٓئِكَةِ ٱسْجُدُوا۟

(११६) तथा जब हामीले फरिश्ताहरूसित भन्यौं कि आदमलाई दण्डवत् (सजदा) गर, त इब्लीस

कुर्आन तथा हदीसमा सुरक्षित छ जसद्वारा मनुष्यको सम्बन्ध अल्लाह तआलासित स्थापित हुन्छ, त्यसको व्यवहार तथा चरित्रमा सुधार आउँछ तथा अल्लाहको प्रसन्नता तथा अप्रसन्नताबारे थाहा हुन्छ । यस्ता दुआहरू (प्रार्थना) मा एउटा दुआ यो पनि हो जुन उहाँले पढ्दै गर्नुहुन्थ्यो ।

«اللَّهُمَّ انْفَعْنِي بِمَا عَلَّمْتَنِي، وَعَلِّمْنِي مَا يَنْفَعُنِي، وزِدْنِي عِلْماً، وَالْحَمْدُ للهِ عَلَى كُلِّ حَالٍ».

(इब्ने माजा बाबुल इनतेफ़ाअ बिल इल्म अमल)

[1] نسيان (बिर्सनु) प्रत्येक व्यक्तिको प्रकृतिमा सम्मिलित छ तथा विचारमा क्षीणता अर्थात् साहसको कमी यो पनि मनुष्यको प्रकृतिमा सामान्यरूपले पाईन्छ । यी दुवै क्षीणता नै शैतानद्वारा उत्पन्न गरिएका शंकाहरूमा फँस्नुका कारण हुन्छन्, यदि यी कमजोरीहरूमा अल्लाहका आदेशबाट विद्रोहको विचार तथा अल्लाहको अवहेलनाको भावना सम्मिलित हुँदैन, भने भूल तथा विचारहरूको दृढतामा कमजोरीबाट उत्पन्न हुनेवाला त्रुटिहरू नबूअतको पदवी तथा गरिमाका विरूद्ध होइन किनभने त्यसका उपरान्त मनुष्य तुरून्त लज्जित भई अल्लाहका सदनमा झुक्छ तथा क्षमा-याचनामा लीन हुन्छ, (जस्तो कि आदरणीय आदमले पनि गरे) । आदरणीय आदमलाई अल्लाह तआलाले सम्झाएको थियो कि शैतान तिम्रो र तिम्री पत्नीको शत्रु हो, यसले तिमीलाई यस्तो नहोस् स्वर्गबाट निष्काशित गराइदेओस् । यही कुरा हो जसलाई प्रतिज्ञाको शब्दले वर्णन गरिएको छ । आदम यस प्रतिज्ञालाई बिर्सिहाले तथा अल्लाह तआलाले एउटा वृक्षका निकट जान अर्थात् त्यसबाट केही खान मनाही गरेको थियो । आदरणीय आदमको हृदयमा यो कुरा थियो कि उनी त्यस वृक्षका निकट जानुहुन्न । तर जब शैतानले अल्लाहको सौगन्ध खाएर यो कुरा भन्यो कि यस वृक्षका फलमा यो गुण छ कि जसले यसलाई खान्छ, त्यसलाई स्थाई जीवन तथा राज्य प्राप्त हुन्छ त ध्येयमा अटल रहन सकेनन् तथा यस ध्येयमा दृढता नहुनका कारण शैतानी चालका शिकार हुन पुगे ।

لِاٰدَمَ فَسَجَدُوْٓا اِلَّآ اِبْلِيْسَ ؕ اَبٰى ﴿١١٦﴾

का अतिरिक्त सबैले गरे, उसले साफसँग इन्कार गरिदियो ।

فَقُلْنَا يٰٓاٰدَمُ اِنَّ هٰذَا عَدُوٌّ لَّكَ وَلِزَوْجِكَ فَلَا يُخْرِجَنَّكُمَا مِنَ الْجَنَّةِ فَتَشْقٰى ﴿١١٧﴾

(११७) तब हामीले भन्यौं, हे आदम ! यो तिम्रो तथा तिम्री पत्नीको शत्रु हो, (ध्यान रहोस्) यस्तो नहोस् कि त्यसले तिमी दुबैलाई स्वर्गबाट निष्काशन गराइदेओस् जसले गर्दा तिमी संकटमा परिहाल ।[1]

اِنَّ لَكَ اَلَّا تَجُوْعَ فِيْهَا وَلَا تَعْرٰى ﴿١١٨﴾

(११८) यहाँ त तिमीलाई यो सुविधा छ कि न तिमी भोको हुन्छौ, न नाङ्गो ।

وَاَنَّكَ لَا تَظْمَؤُا فِيْهَا وَلَا تَضْحٰى ﴿١١٩﴾

(११९) तथा न तिमी यहाँ तिर्खाएका हुन्छौ न घामको कष्ट सहन्छौ ।

فَوَسْوَسَ اِلَيْهِ الشَّيْطٰنُ قَالَ يٰٓاٰدَمُ هَلْ اَدُلُّكَ عَلٰى شَجَرَةِ الْخُلْدِ وَمُلْكٍ لَّا يَبْلٰى ﴿١٢٠﴾

(१२०) परन्तु शैतानले उसलाई शङ्कामा पार्‍यो, भन्यो कि हे आदम ! के म तिमीलाई स्थाई जीवनका वृक्ष तथा त्यो स्वामित्व भनूँ जुन कहिल्यै पुरानो नहोस् ।

[1]यहाँ شقا मेहनत तथा परिश्रमको अर्थमा छ, अर्थात् स्वर्गमा जुन खाने-पिउने, वस्त्र तथा रहनुको सुविधा बिना कुनै परिश्रम प्राप्त हुन्छ स्वर्गबाट निस्केर गए उपरान्त यी चारै वस्तुहरूको प्राप्तिका लागि मिहेनत तथा परिश्रम गर्नुपर्दछ, जसरी प्रत्येक मनुष्यलाई यी मूल आवश्यकताहरूको प्राप्तिका लागि परिश्रम गर्नुपर्छ । यसका अतिरिक्त मात्र आदमसित भनियो कि तिमी मिहेनत तथा परिश्रममा पर्नेछौ । दुबैलाई भनिएन, यद्यपि वृक्षको फल आदम तथा हव्वा दुबैले खाएका थिए । यसकारण कि मुख्य सम्बोधन आदमलाई नै थियो । यसका अतिरिक्त मूल आवश्यकताहरूको पूर्तिको भार पुरुषमाथि नै हुन्छ, स्त्रीमाथि होइन । अल्लाह तआलाले स्त्रीलाई यस मेहनत तथा परिश्रमबाट सुरक्षित राखेर घरकी रानीको पद प्रदान गरेको छ । परन्तु आज स्त्रीलाई "अल्लाहको दया" "दासताको जंजीर" प्रतीत हुन्छ जसबाट स्वतन्त्र हुनका लागि त्यो व्याकूल तथा आन्दोलनमा व्यस्त छ । अफसोच ! शैतानी चाल पनि कति प्रभावशाली तथा त्यसको जाल पनि कति लोभ्याउने तथा मन आकृष्ट पार्नेछ ।

فَأَكَلَا مِنْهَا فَبَدَتْ لَهُمَا سَوْآتُهُمَا وَطَفِقَا يَخْصِفَانِ عَلَيْهِمَا مِن وَرَقِ الْجَنَّةِ ۚ وَعَصَىٰ آدَمُ رَبَّهُ فَغَوَىٰ ﴿١٢١﴾

(१२१) अत: ती दुबैले त्यस वृक्षबाट केही खाए त्यस पश्चात उनका गुप्ताङ्ग खुलिहाले तथा स्वर्गका पातहरू आफूमाथि टाँस्नथाले । आदमले आफ्नो प्रभुको अवज्ञा गऱ्यो तथा विचलित भइहाल्यो ।[1]

ثُمَّ اجْتَبَاهُ رَبُّهُ فَتَابَ عَلَيْهِ وَهَدَىٰ ﴿١٢٢﴾

(१२२) अनि त्यसको प्रभुले त्यसलाई सुसज्जित गऱ्यो, उसको क्षमालाई स्वीकार गऱ्यो तथा उसको मार्गदर्शन गऱ्यो ।[2]

قَالَ اهْبِطَا مِنْهَا جَمِيعًا ۖ بَعْضُكُمْ لِبَعْضٍ عَدُوٌّ ۖ فَإِمَّا يَأْتِيَنَّكُم مِّنِّي هُدًى فَمَنِ اتَّبَعَ هُدَايَ فَلَا يَضِلُّ وَلَا يَشْقَىٰ ﴿١٢٣﴾

(१२३) भन्यो, तिमी दुबै यहाँबाट झरिहाल, तिमी आपसमा एक-अर्काका शत्रु हौ, अब तिम्रो पासमा जहिलेपनि मेरो तर्फबाट निर्देश पुग्छ, त जो मेरो निर्देशको पालन गर्नेछ, त्यो न मार्ग-विचलित हुनेछ, न कठिनाईमा पर्नेछ ।

[1]अर्थात् वृक्षको फल खाएर अवज्ञा गऱ्यो, जसको कुफल यो भयो कि त्यो उद्देश्य अथवा सत्य-मार्गबाट विचलित भयो ।

[2]यसबाट केही मानिसहरू भावार्थ निकाल्दै भन्दछन् कि आदरणीय आदमबाट उक्त भूल नबूअतभन्दा पूर्व भन्यो, तथा नबूअतसित उहाँलाई त्यसको पश्चात सुशोभित गरियो । परन्तु हामीले पछिल्ला पृष्ठमा यस 'भूल' को जुन वास्तविकता वर्णन गरेका छौं, त्यो निर्दोषताको प्रतिकूल रहँदैन । किनभने यस्ता भूल तथा त्रुटि जसको सम्बन्ध आमन्त्रण तथा अल्लाहको सन्देश पुऱ्याउन तथा धर्म विधानसित छैन, बरु व्यक्तिगत कर्मसित छ तथा त्यसमा पनि त्यसको कारण निश्चयको शिथिलता छ, त यो वास्तवमा त्यो पाप नै होइन जसको कारण मनुष्य अल्लाहका क्रोधको पात्र बन्दछ । यसमाथि जुन पाप शब्द भनिएको छ त्यो मात्र त्यसको गरिमा तथा उच्च पदका कारण कि ठूलाका सानोतिनो त्रुटि पनि ठूलो ठानिन्छ, यसकारण आयतको यो अर्थ होइन कि हामीले त्यसपश्चात उसलाई नबूअतका लागि रोजिहाल्यौं, बरु अर्थ यो हो कि लज्जा तथा क्षमा-याचनाका पश्चात हामीले फेरि त्यसलाई उच्च पदमा आसीन गऱ्यौं, जुन पहिले उसलाई प्राप्त थियो । उनलाई धर्तीमा उतार्नुको निर्णय, हाम्रो इच्छा, ज्ञान तथा रहस्यमा आधारित थियो । यसबाट यो नठानियोस् कि यो हाम्रो क्रोध हो जुन आदममाथि अवतरित भयो ।

وَمَنْ أَعْرَضَ عَن ذِكْرِي فَإِنَّ لَهُ مَعِيشَةً ضَنكًا وَنَحْشُرُهُ يَوْمَ الْقِيَامَةِ أَعْمَىٰ ﴿١٢٤﴾

(१२४) तथा जो मेरो स्मरणबाट मुख फर्काउनेछ, त्यसको जीवन संकीर्ण हुनेछ[1] तथा हामी केयामतका दिन त्यसलाई अन्धो गरी उठाउनेछौं ।[2]

قَالَ رَبِّ لِمَ حَشَرْتَنِي أَعْمَىٰ وَقَدْ كُنتُ بَصِيرًا ﴿١٢٥﴾

(१२५) (त्यो) भन्नेछ प्रभु ! मलाई तिमीले अन्धो बनाएर किन उठायौ ? यद्यपि म देख्थे।

قَالَ كَذَٰلِكَ أَتَتْكَ آيَاتُنَا فَنَسِيتَهَا ۖ وَكَذَٰلِكَ الْيَوْمَ تُنسَىٰ ﴿١٢٦﴾

(१२६) उत्तर प्राप्त हुनेछ कि यसैप्रकार हुनुपर्थ्यो, तिमीले मेरा आएका आयतहरूलाई बिर्सिदियौ । यसैप्रकार आज तिमी पनि बिर्सिन्छौ ।

وَكَذَٰلِكَ نَجْزِي مَنْ أَسْرَفَ وَلَمْ يُؤْمِن بِآيَاتِ رَبِّهِ ۚ وَلَعَذَابُ الْآخِرَةِ أَشَدُّ وَأَبْقَىٰ ﴿١٢٧﴾

(१२७) तथा हामी यस्तै प्रतिफल प्रत्येक व्यक्तिलाई दिने गर्दछौं, जो सीमा उल्लंघन गर्दछ तथा आफ्ना प्रभुका आयतमा ईमान ल्याउँदैन, तथा निःसन्देह परलोक (आख़िरत) को यातना अत्याधिक कडा तथा स्थाई छ ।

أَفَلَمْ يَهْدِ لَهُمْ كَمْ أَهْلَكْنَا قَبْلَهُم مِّنَ الْقُرُونِ يَمْشُونَ فِي مَسَاكِنِهِمْ ۗ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّأُولِي النُّهَىٰ ﴿١٢٨﴾

(१२८) के उनीहरूको मार्गदर्शन यस कुराले पनि गरेन कि हामीले उनीभन्दा पूर्व धेरै वस्ती ध्वस्त गरिदिएका छौं, जसका वासीहरूका स्थानमा यिनी हिंडडुल गरिराखेका छन् । निःसन्देह यसमा बुद्धिमानीहरूका लागि धेरै निशानी छन् ।

[1]यस संकीर्णताबाट केही विद्वानहरूले कब्रको यातना तथा केहीले त्यो चिन्ता तथा व्याकुलता तात्पर्य लिएका छन् जसमा अल्लाहको स्मरणबाट निश्चिन्त ठूला-ठूला धनवान अल्भिरहन्छन् ।

[2]यसबाट तात्पर्य वास्तवमा आँखाले अन्धो हुनु हो, अथवा सुझ-बुझले अन्धो हुनु हो अर्थात् उसलाई त्यहाँ कुनै यस्तो तर्क देखिँदैन जसलाई प्रस्तुत गरी त्यो अग्नि दण्डबाट मुक्त हुनसकोस् ।

وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِن رَّبِّكَ لَكَانَ لِزَامًا وَأَجَلٌ مُّسَمًّى ﴿١٢٩﴾

(१२९) तथा यदि तिम्रो प्रभुको कुरा पूर्वतः निर्धारित तथा समय निर्धारण नभएको भए, त यसैबेला यातना आई समात्ने थियो ।[1]

فَاصْبِرْ عَلَىٰ مَا يَقُولُونَ وَسَبِّحْ بِحَمْدِ رَبِّكَ قَبْلَ طُلُوعِ الشَّمْسِ وَقَبْلَ غُرُوبِهَا ۖ وَمِنْ آنَاءِ اللَّيْلِ فَسَبِّحْ وَأَطْرَافَ النَّهَارِ لَعَلَّكَ تَرْضَىٰ ﴿١٣٠﴾

(१३०) तसर्थ उनका कुरामा धैर्य राख तथा आफ्नो प्रभुको पवित्रता एवं महिमाको वर्णन गरिराख, सूर्योदयभन्दा पूर्व तथा त्यसको अस्त हुनु पूर्व तथा रात्रिका विभिन्न समयमा पनि तथा दिनका भागहरूमा पनि महिमागान् गर्दैराख ।[2] अति संभव छ कि

[1]अर्थात् यी झूठा तथा मक्काका मूर्तिपूजक देख्दैनन् कि उनीभन्दा कैयन् समुदाय गुज्रिसकेका छन्, जसका यी उत्तराधिकारी हुन् तथा उनका नातिको तर्फबाट यिनको यातायात छ, उनीहरूलाई हामीले झुठ्लाउनुको कारण नष्ट गरिसकेका छौं, जसका भयानक परिणाममा बुद्धिमान तथा विद्वानहरूका लागि निशानी छन् । परन्तु यी मक्कावासी आफ्ना आँखा चिम्म गरी उनीहरूकै अनुकरण गरिराखेका छन् । यदि अल्लाह तआलाले पहिलादेखि नै यो निर्णय नगरेको भए कि त्यो बिना कुनै तर्क पूर्ण गरी तथा त्यो अवधिपूर्ण हुनुभन्दा पहिला, जो त्यो अवसरको लागि कुनै समुदायलाई प्रदान गर्दछ, कसैलाई नाश गर्दैन त तुरून्त अल्लाहको प्रकोप उनलाई आई समातिहाल्थ्यो तथा यिनीहरूले विनाशका स्वाद चाखिसकेका हुन्थे। अर्थ यो हो कि रिसालतलाई झुठ्लाउनुको उपरान्त यदि उनीमाथि अहिलेसम्म प्रकोप आएन भने यो बुझ्नु कि भविष्यमा पनि आउने छैन, बरु अहिले उनलाई अल्लाहको तर्फबाट अवसर प्राप्त छ, जस्तो कि त्यो प्रत्येक समुदायलाई दिन्छ। कर्मको अवसरको अवधि समाप्त हुनासाथ उनलाई अल्लाहको प्रकोपबाट बचाउनेवाला कोही हुनेछैन ।

[2]केही व्याख्याकारहरूका निकट महिमागानसित तात्पर्य नमाज़ छ तथा उनी यसबाट पाँच नमाज़ बुझ्दछन् । सूर्योदयभन्दा पूर्व फज्र, सूर्यास्तभन्दा पूर्व अस्र, रात्रिका क्षण मग़रिब तथा ईशा तथा दिनका किनारहरूबाट जोहरको नमाज़को तात्पर्य छ किनभने जोहरको समय यो दिनको प्रथम पक्षको अन्तिम तथा दिनको अन्तिम पक्ष प्रथम भाग हो। केहीका निकट यी समयहरूमा त्यसैपनि अल्लाहको महिमा तथा प्रशंसा गरिन्छ जसमा नमाज़, कुरआनको पाठ, वर्णन तथा प्रार्थना तथा ऐच्छिक इबादत सबै सम्मिलित छन्। अर्थ यो हो कि उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) यी मूर्तिपूजकहरूको झुठ्लाउने कुरोबाट हतास नहोऊन् । अल्लाहको महिमा तथा प्रशंसा गरिरहून् । अल्लाह तआला जब चाहने छ, उनलाई पकडिहाल्ने छ ।

तिमी प्रसन्न हुनसक ।[1]

وَلَا تَمُدَّنَّ عَيْنَيْكَ إِلَىٰ مَا مَتَّعْنَا بِهِۦٓ أَزْوَٰجًا مِّنْهُمْ زَهْرَةَ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا لِنَفْتِنَهُمْ فِيهِ ۚ وَرِزْقُ رَبِّكَ خَيْرٌ وَأَبْقَىٰ ﴿١٣١﴾

(१३१) तथा आफ्नो दृष्टि कहिल्यै ती वस्तुहरूतिर नपार, जुन हामीले उनीहरूमध्ये विभिन्न मानिसहरूका सांसारिक शोभाका लागि दिएका छौं ताकि यसमा उनको परीक्षा गर्नसकौं ।[2] तिम्रो प्रभुद्वारा प्रदान गरिएको नै अति श्रेष्ठ तथा स्थाई छ ।[3]

وَأْمُرْ أَهْلَكَ بِٱلصَّلَوٰةِ وَٱصْطَبِرْ

(१३२) तथा आफ्ना परिवारका मानिसलाई नमाज़ पढ्न आदेश देउ तथा स्वयं पनि त्यसमाथि

[1]यो فسبح सित सम्बन्धित छ । अर्थात् यी समयमा महिमाको वर्णन गर्नुस्, यो आशा राख्दै कि अल्लाहकहाँ तपाईंलाई त्यो स्थान तथा पद प्राप्त हुनेछ जसबाट तपाईं प्रसन्न हुनुहुनेछ ।

[2]यो त्यही विषय हो जुन यसभन्दा पूर्व सूरः आले-इमरान-१९६ तथा १८७ सूरः अल-हिज्र-८७ तथा ८८ तथा अल-कहफ्-७ आदिमा वर्णित भएको छ ।

[3]यसबाट तात्पर्य आख़िरतको बदला पुण्य हो, जुन संसारको सुख-सुविधाभन्दा श्रेष्ठ छ तथा यसका सापेक्ष स्थाई बने । हदीसमा वर्णित छ कि आदरणीय उमर नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा उपस्थित भए र देखे कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम एउटा विस्तार नभएको गुन्द्री (चटाई) मा पल्टिनु भएको छ, तथा घरको सामग्रीको यो स्थिति छ कि घरमा छालाका दुई वस्तुहरूबाहेक केही छैन । आदरणीय उमरका आँखाबाट आँशु प्रवाहित भइहाले । नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले सोध्नुभयो, उमर ! के कुरो छ, किन रुन्छौ ? जवाफ दिए कि हे रसूल सल्लल्लाहु अलैहि वसल्लम ! कैसर (रोमको राजा) तथा किसरा (ईरानका राजा) कुनप्रकार सुख-सुविधाले पूर्ण जीवन व्यतीत गरिराखेका छन् तथा तपाईं सल्लल्लाहु अलैहि वसल्लमको, यस कुरोको उपरान्त कि तपाईं सल्लल्लहु अलैहि वसल्लम सृष्टिमा सर्वश्रेष्ठ हुनुहुन्छ, यो स्थिति छ ? भन्नुभयो, उमर ! "के तिमी अहिलेसम्म सन्देहमा छौ ? यी यस्ता मानिसहरू हुन् जसलाई सुख-सुविधाका कुरा संसारमा मात्र दिइएको छ ।" अर्थात् आख़िरतमा उनीहरूको लागि केही हुनेछैन । (सहीह बुख़ारी सूरतुत-तहरीम तथा सहीह मुस्लिम बाबुल ईला)

عَلَيْهَا ۖ لَا نَسْأَلُكَ رِزْقًا ۖ نَّحْنُ نَرْزُقُكَ ۗ وَالْعَاقِبَةُ لِلتَّقْوَىٰ ﴿١٣٢﴾

दृढ रह,[1] हामी तिमीसित जीविका माँग्दैनौं, बरु हामी स्वयं तिमीलाई जीविका प्रदान गर्दछौं । अन्त्यमा सर्वसम्मान सदाचारीहरूकै हुन्छ ।

وَقَالُوا لَوْلَا يَأْتِينَا بِآيَةٍ مِّن رَّبِّهِ ۚ أَوَلَمْ تَأْتِهِم بَيِّنَةُ مَا فِي الصُّحُفِ الْأُولَىٰ ﴿١٣٣﴾

(१३३) तथा (उनीहरूले) भने कि यो (नबी) हाम्रा निम्ति आफ्नो प्रभुको तर्फबाट कुनै निशानी किन ल्याएन ?[2] के उनीहरू छेउ पूर्वका किताबहरूका स्पष्ट निशानीहरू पुगेनन् ?[3]

وَلَوْ أَنَّا أَهْلَكْنَاهُم بِعَذَابٍ مِّن قَبْلِهِ لَقَالُوا رَبَّنَا لَوْلَا أَرْسَلْتَ إِلَيْنَا رَسُولًا فَنَتَّبِعَ آيَاتِكَ مِن قَبْلِ أَن نَّذِلَّ وَنَخْزَىٰ ﴿١٣٤﴾

(१३४) तथा यदि हामीले यसभन्दा पूर्व नै[4] उनीहरूलाई प्रकोपद्वारा ध्वस्त गरिदिएको भए यिनीहरू अवश्य भनिहाल्थे कि हे हाम्रा प्रभु ! तिमीले हाम्रो पासमा आफ्नो रसूल (ईशदूत) किन पठाएनौं ताकि हामी तिम्रा आयतहरूको पालन गर्दथ्यौं, यसभन्दा पूर्व कि

[1]यस सम्बोधनमा सम्पूर्ण मुस्लिम समुदाय नबी सल्लल्लाहु अलैहि वसल्लमका अनुयायी छन् । अर्थात प्रत्येक मुसलमानको लागि अनिवार्य छ कि त्यो स्वयं पनि नमाज़ नियमितरूपले पढोस् तथा आफ्नो परिवारवालाहरूलाई पनि नमाज़ पढ्नमा वल दिइयोस् ।

[2]अर्थात् उनका इच्छा अनुसार निशानी, जस्तो समूदका लागि ऊँटनी प्रकट गरिएको थियो ।

[3]यिनीवाट तात्पर्य तौरात, इंजील तथा ज़बूर आदि हुन् । अर्थात् के तिनीहरूमा नबी सल्लल्लाहु अलैहि वसल्लमका गुणहरूलाई प्रदर्शित गरिएको छैन, जसबाट उनको नबूअतको पुष्टि हुन्छ । अथवा यो अर्थ छ कि के उनी छेउ अघिका समुदायहरूको यो अवस्थाहरू पुगेनन् कि उनीहरूले जब आफ्ना इच्छा अनुसार चमत्कारको माँग गरे तथा त्यो उनलाई देखाइयो, परन्तु त्यसका उपरान्त ईमान (विश्वास) ल्याएनन् । त्यसपश्चात उनीहरूलाई नष्ट गरियो ।

[4]तात्पर्य संसारका अन्तिम पैग़म्बर आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम हुन् ।

हामी अपमानित हुन्थ्यौं तथा तिरस्कृत हुन्थ्यौं ।

(१३५) भनिदिनुस् कि प्रत्येक परिणामको प्रतीक्षामा छ,[1] त तिमीहरु पनि प्रतीक्षा गर शीघ्र नै पूर्णतः थाहा पाइहाल्नेछौ कि सोझो मार्गवाला को हुन् तथा को मार्गप्राप्त गरिएका हुन् ।[2]

قُلْ كُلٌّ مُّتَرَبِّصٌ فَتَرَبَّصُوا ۖ فَسَتَعْلَمُونَ مَنْ أَصْحَابُ الصِّرَاطِ السَّوِيِّ وَمَنِ اهْتَدَىٰ ﴿١٣٥﴾

[1]अर्थात् मुसलमान तथा काफ़िर दुबै त्यसको प्रतीक्षामा छन् कि कुफ्र विजयी हुन्छ अथवा इस्लाम विजयी हुन्छ ?

[2]यसको ज्ञान तिमीलाई यसबाट भइहाल्नेछ कि अल्लाहको सहायताले सफल तथा सम्मानित को हुन्छ ? अन्ततः यो सफलता मुसलमानहरूको पक्षमा आयो, जसबाट यो स्पष्ट भयो कि इस्लाम नै सीधा मार्ग हो तथा यसका अनुयायी नै मार्गदर्शन प्राप्त छन् ।

## सूरतुल अम्बिया-२१

سُوْرَةُ الْأَنْبِيَاءِ

सूर: अल-अम्बिया मक्कामा अवतरित भएको तथा यसमा ११२ आयतहरू तथा ७ रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्त कृपालु तथा दयालु छ ।

اِقْتَرَبَ لِلنَّاسِ حِسَابُهُمْ وَهُمْ فِيْ غَفْلَةٍ مُّعْرِضُوْنَ ①

(१) मानिसहरूका हिसाबको समय निकट आइसकेको छ,[1] तैपनि उनीहरू अचेत (अवस्थामा) विमुख भएका छन् ।[2]

مَا يَأْتِيْهِمْ مِّنْ ذِكْرٍ مِّنْ رَّبِّهِمْ مُّحْدَثٍ اِلَّا اسْتَمَعُوْهُ وَهُمْ يَلْعَبُوْنَ ②

(२) उनका समीप उनका प्रभुका तर्फबाट जुन पनि नयाँ-नयाँ निशानीहरू आउँछन्, त्यसलाई उनीहरू हाँसो-ख्यालमै सुन्दछन् ।[3]

لَاهِيَةً قُلُوْبُهُمْ ۭ وَاَسَرُّوا النَّجْوَى ڰ الَّذِيْنَ ظَلَمُوْا ڰ هَلْ هٰذَآ اِلَّا بَشَرٌ

(३) उनका हृदय पूर्णरूपले निश्चेत छन् तथा ती अत्याचारीहरूले लुकि-लुकि कानेखुसी गरे कि यो तिमीजस्तै मानव पुरुष हो,

[1]हिसाबको समयको अर्थ प्रलय हो, जुन प्रत्येक क्षण निकट आइराखेको छ, तथा प्रत्येक त्यो वस्तु जुन आउनेवाला तथा निकट छ, प्रत्येक व्यक्तिको मृत्यु स्वयं उसको लागि प्रलय हो । यसको अतिरिक्त व्यतीत भएको समयको अपेक्षा प्रलय निकट छ किनभने जति समय व्यतीत भइसक्यो, शेष रहने समय त्यसभन्दा कम छ ।

[2]अर्थात् त्यसको तयारीबाट निश्चिन्त, माया-मोहमा लिप्त तथा ईमानका अभियाचनाहरूबाट अचेत छन् ।

[3]अर्थात कुरआन जुन समय-समयमा स्थिति तथा आवश्यकताहरूका अनुरुप नयाँ-नयाँ अवतरित भइरहन्छ, यो यद्यपि उनको शिक्षाका लागि अवतरित हुन्छ, परन्तु उनीहरू त्यसलाई यसप्रकार सुन्दछन् मानौं उनी त्यससित उपहास तथा हाँसो-ख्याल गरिराखेका छन्, अर्थात त्यसमा चिन्तन, ध्यान तथा विचार गर्दैनन् ।

مِّثْلُكُمْ ۖ أَفَتَأْتُونَ السِّحْرَ وَأَنتُمْ تُبْصِرُونَ ③

अनि के कारण छ कि तिमी आँखाले देखेको जादूमा फँस्न जान्छौ ।[1]

قَالَ رَبِّي يَعْلَمُ الْقَوْلَ فِي السَّمَاءِ وَالْأَرْضِ ۖ وَهُوَ السَّمِيعُ الْعَلِيمُ ④

(४) (पैग़म्बरले) भने, मेरो प्रभु प्रत्येक कुरालाई जुन आकाश एवं धर्तीमा छ, राम्ररी जान्दछ, त्यो अति सुन्नेवाला तथा जान्नेवाला छ ।[2]

بَلْ قَالُوا أَضْغَاثُ أَحْلَامٍ بَلِ افْتَرَاهُ بَلْ هُوَ شَاعِرٌ فَلْيَأْتِنَا بِآيَةٍ كَمَا أُرْسِلَ الْأَوَّلُونَ ⑤

(५) (यति मात्र होइन) बरु यिनी त भन्छन् कि यो कुर्आन काल्पनिक सपनाहरूको संग्रह हो, बरु उसले त्यसले स्वयं यसलाई रचेको छ, बरु यो कवि हो,[3] अन्यथा हाम्रा समक्ष यसले कुनै यस्ता निशानी ल्याउँथे जस्तो कि पूर्वकालिक पैग़म्बर (निशानी दिइएर) पठाइएका थिए ।[4]

---

[1]अर्थात् नबीको मानव पुरुष हुने कुरा उनी स्वीकार गर्न सक्दैनन्, तैपनि यो भन्दछन् कि तिमी देखिराखेका छैनौ कि यो जादूगर हो, तिमी त्यसको जादूलाई देख्दा-बुझ्दा किन फँस्छौ ?

[2]त्यो प्रत्येक भक्तको कुरा सुन्छ तथा सबैका कर्महरूलाई राम्ररी जान्दछ । तिमी जुन झुठा कुरा गरिराखेका छौ, त्यो सुनिराखेको छ तथा मेरो सत्यतालाई एवं जुन सन्देश तिमीलाई दिइराखेको छु, त्यसको यथार्थतासित राम्ररी परिचित छ ।

[3]यी कानेखुसी गर्ने अत्याचारीहरूले यसैमा चित्त बुझाएनन्, बरु यो पनि भने कि यो कुर्आन त जटिल सपनाहरू जस्तै नराम्रा विचारहरूको संग्रह हो, बरु उसको आफ्नो कृति हो, बरु यो कवि हो, तथा कुर्आन मार्गदर्शक किताब होइन, कविता हो । अर्थात उनलाई कुनै एउटै कुरामा सन्तोष छैन । प्रतिदिन एउटा नयाँ षड्यन्त्र रच्दछन् तथा नयाँ-नयाँ आक्षेप लगाउँछन् ।

[4]अर्थात् जसरी समूदका लागि ऊँटनी, मूसाका लागि छडी तथा उनको उज्जवल प्रकाशित हात आदि ।

(६) यिनीभन्दा पूर्व जति वस्तीहरू हामीले ध्वस्त गर्‍यौं ईमानबाट बञ्चित थिए, त के अब यिनी ईमान ल्याउनेछन् (विश्वास गर्नेछन्) ?[1]

مَآ ءَامَنَتۡ قَبۡلَهُم مِّن قَرۡيَةٍ أَهۡلَكۡنَٰهَآۖ أَفَهُمۡ يُؤۡمِنُونَ ⑥

(७) तिमीभन्दा पहिले पनि जति पैग़म्बर हामीले पठायौं सबै मानव-पुरुष थिए,[2] जसतिर हामी प्रकाशना (वह्‌य) अवतरित गर्दथ्यौं, तसर्थ तिमी ज्ञान[3] वालाहरूसित सोध यदि स्वयं तिमीलाई ज्ञान छैन ।

وَمَآ أَرۡسَلۡنَا قَبۡلَكَ إِلَّا رِجَالٗا نُّوحِيٓ إِلَيۡهِمۡۖ فَسۡـَٔلُوٓاْ أَهۡلَ ٱلذِّكۡرِ إِن كُنتُمۡ لَا تَعۡلَمُونَ ⑦

[1]अर्थात् उनीभन्दा पूर्व हामीले जति वस्तीहरू नाश गर्‍यौं यस्तो भएन कि उनीहरूले आफ्नो इच्छाअनुसार चमत्कार देखे पश्चात ईमान ल्याएका हुन्, बरु चमत्कार देखे पश्चात पनि ईमान ल्याएनन् जसका कारण उनको विनाश उनको भाग्य बन्न पुग्यो । त के मक्कावासीहरूलाई उनका इच्छा अनुसार कुनै चमत्कार देखाइन्छ भने उनीहरू ईमान ल्याउनेछन् ? कदापि होइन, यिनी तैपनि अविश्वास एवं विरोधी मार्गमा उसैप्रकार अग्रसर रहनेछन् ।

[2]अर्थात् सबै नबी पुरुष थिए, न कोही मानव जातिका अतिरिक्त कोही नबी आयो, तथा न कोही पुरुषका अतिरिक्त, अर्थात नबूअत मनुष्यहरूका साथ तथा मनुष्यहरूमा पुरुषहरूका साथ विशेषरुपले रहेको छ । यसबाट ज्ञात भयो कि कुनै महिला नबी भएन, यसकारण कि नबूअत पनि ती कर्तब्यहरूमध्ये छ, महिलाका भौतिक तथा प्राकृतिक कर्महरूको परिधिभन्दा बाहिर छ ।

[3]अहले जिक (ज्ञानी मानिसहरू) सित तात्पर्य किताबवाला मानिसहरू हुन्, जो पूर्वका आकाशीय पुस्तकहरूको ज्ञान राख्दथे, उनीहरूसित सोध कि पूर्वकालिक नबीहरूमा जो गुज्रिसकेका छन्, उनी मनुष्य थिए अथवा अन्य ? उनीहरू तिमीलाई बताउने छन् कि सबै मनुष्य थिए । यसबाट केही मानिसहरू "अनुकरण (तक़्लीद)" को प्रमाण प्रस्तुत गर्दछन्, जुन उचित छैन । "अनुकरणवाद" मा के हुन्छ ? केवल एक विशेष व्यक्ति तथा त्यससँग सम्बन्धित एउटा निर्धारित चिन्तनलाई मूल बनाएर तथा त्यसै अनुसार कार्य गरिन्छ । दोस्रो यो कि बिना कुनै प्रमाण त्यसको कुरोलाई स्वीकार गरिन्छ । जबकि आयतमा "अहले ज़िक्र" सित अर्थ कुनै विशेष व्यक्ति होइन, बरु प्रत्येक ज्ञानी हो, जुन तौरात तथा इंजील (बाइबल) को ज्ञान राख्दथ्यो । यसबाट व्यक्तिगत अनुकरणको खण्डन हुन्छ ? यसमा त ज्ञानीहरूसित सोध्न भनिएको छ, जुन सर्वसाधारणको लागि अनिवार्य छ, जसबाट कसैको इन्कार हुन सक्दैन, यसका अतिरिक्त तौरात तथा इंजील आकाशीय पुस्तकहरू थिए तर पछि मानिसहरुले यिनमा थप-घट गरिदिए । यसर्थ यिनलाई जस्ताका त्यस्तै अलग पार्न सकिदैन साथै मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको ईशदूतत्वपछि सम्पूर्ण मानव समाजको कल्याण उहाँको पूर्ण अनुसरणमा नै छ । जहाँसम्म आवश्यक केही सोध्नुपर्ने कुराहरु छन् भने ती मात्र अझ विश्वासका लागि हुन् । तैपनि यसप्रकारका कुराहरुमा विश्वास गर्नका लागि

وَمَا جَعَلْنَٰهُمْ جَسَدًا لَّا يَأْكُلُونَ ٱلطَّعَامَ وَمَا كَانُوا۟ خَٰلِدِينَ ⑧

(८) तथा हामीले उनलाई यस्तो शरीर बनाएनौं कि उनीहरू भोजन नगरून् तथा न उनी सधैं जीवित रहनेवाला थिए।[1]

ثُمَّ صَدَقْنَٰهُمُ ٱلْوَعْدَ فَأَنجَيْنَٰهُمْ وَمَن نَّشَآءُ وَأَهْلَكْنَا ٱلْمُسْرِفِينَ ⑨

(९) अनि हामीले उनीसित गरिएका सबै वचन सत्य गरेर देखायौं, उनीहरूलाई तथा ज-जसलाई हामीले चाहयौं मुक्ति प्रदान गरिदियौं तथा सीमा उल्लघंन गर्नेहरूलाई विनाश गरिदियौं।[2]

لَقَدْ أَنزَلْنَآ إِلَيْكُمْ كِتَٰبًا فِيهِ ذِكْرُكُمْ ۖ أَفَلَا تَعْقِلُونَ ⑩

(१०) नि:सन्देह हामीले तिमीतिर किताब अवतरित गरेका छौं, जसमा तिम्रा लागि शिक्षा छ। के तैपनि तिमी बुद्धिको प्रयोग गर्दैनौ ?

وَكَمْ قَصَمْنَا مِن قَرْيَةٍ كَانَتْ ظَالِمَةً وَأَنشَأْنَا بَعْدَهَا قَوْمًا ءَاخَرِينَ ⑪

(११) तथा धेरै वस्तीहरू हामीले ध्वस्त गरिदियौं,[3] जुन अत्याचारी थिए तथा उनका पश्चात हामीले अन्य समुदाय पैदा गरे।



पवित्र कुर्आन र सही हदीसबाट प्रमाण प्राप्त हुनुपर्छ। अथवा कुनै व्यक्तिका आफ्ना विचार ? यदि तौरात तथा इंजील आकाशीय पुस्तकहरू थिए, त अर्थ यो भयो कि ज्ञानीहरूद्वारा आकाशीय पुस्तकहरूका नियम ज्ञात गरून्, जुन आयतको उचित अर्थ हो। तथा यदि तिनी कुनै एक विशेष व्यक्ति, गुरु, तथा त्यसका शिष्यहरूका उपदेशको संग्रह थियो भने अवश्य वैचारिक (फ़िक़्ही) अनुकरणवाद (तक़लीद) को भावार्थ यस आयतबाट निस्कन्छ, परन्तु के आकाशीय पुस्तक तथा मनुष्यहरूद्वारा रचित वैचारिक पुस्तकहरू, दुवै एउटै स्थान ग्रहण गर्न योग्य छन् ?

[1]वरु उनीहरू भोजन पनि गर्दथे तथा मृत्युको स्वाद चाखी चिर अस्थायी लोकतिर पनि गए। यी नबीहरूको मनुष्य हुने कुराको प्रमाण प्रस्तुत गरिदैछन्।

[2]अर्थात वचनका अनुसार नवीहरूलाई तथा ईमानवालाहरूलाई मोक्ष प्रदान गर्यौं तथा सीमा उल्लंघन गर्नेवाला नास्तिक (काफ़िरहरू) तथा मूर्तिपूजकहरूलाई हामीले नाश गरिदियौं।

[3]قَصَمْ को अर्थ हो तोड-फोड गरिदिनु तथा رکض अधिकतावाची रूप हो, अर्थात् धेरै वस्तीहरूलाई हामीले ध्वस्त गरिदियौं, तोड-फोड गरिदियौं, जुनप्रकार अन्य स्थानमा भनिएको छ कि "नूहका समुदायका पश्चात कैयन् वस्तीहरूलाई हामीले नाश गरिदियौं।" (सूर: बनी-इस्राईल-१७)

فَلَمَّآ أَحَسُّوا۟ بَأْسَنَآ إِذَا هُم مِّنْهَا يَرْكُضُونَ ﴿١٢﴾

(१२) अनि जब उनीहरूलाई हाम्रा यातनाको आभास भयो तब त्यस (यातना) बाट भाग्न थाले ।[1]

لَا تَرْكُضُوا۟ وَٱرْجِعُوٓا۟ إِلَىٰ مَآ أُتْرِفْتُمْ فِيهِ وَمَسَٰكِنِكُمْ لَعَلَّكُمْ تُسْـَٔلُونَ ﴿١٣﴾

(१३) भाग-दौड नगर[2] तथा जहाँ तिमीलाई सुख प्रदान गरिएको थियो, त्यहीं फर्क तथा आफ्ना घरहरूतिर जाउ,[3] ताकि तिमीसित प्रश्न त गरियोस् ।[4]

قَالُوا۟ يَٰوَيْلَنَآ إِنَّا كُنَّا ظَٰلِمِينَ ﴿١٤﴾

(१४) उनीहरू भन्नथाले हाय हाम्रो दूर्भाग्य ! निःसन्देह हामी अत्याचारी थियौं ।

فَمَا زَالَت تِّلْكَ دَعْوَىٰهُمْ حَتَّىٰ

(१५) अनि उनको यही कथन रहयो,[5] यहाँसम्मकि हामीले उनीहरूलाई जरैदेखि काटिएको खेती तथा

[1]संवेदनको अर्थ ज्ञान इन्द्रियहरूबाट जान्नु । अर्थात् जब उनीहरूले यातना (प्रकोप) अथवा त्यसका लक्षणहरू आउँदै गरेको आँखाले देखे, अथवा कडक, गर्जन सुनेर ज्ञान गरे, तब त्यसबाट बाँच्नका निम्ति भाग्नुको मार्ग खोज्न थाले । ركض को अर्थ हो मानिसले घोडा आदिमा बसेर त्यो दगुर्नको लागि कुरकुच्चाले हान्नु । यहींबाट यो भाग्ने अर्थमा प्रयोग हुनथाल्यो ।

[2]यो फरिश्ताहरूले आकाशवाणी गरे अथवा ईमानवालाहरूले हाँसेर भने ।

[3]अर्थात् जुन सुख तथा सुविधाहरू तिमीलाई प्राप्त थिए, जुन तिम्रा अविश्वास एवं अत्याचारका कारण थिए तथा ती घर जसमा तिमी रहन्थ्यौ, जसको सुन्दरता एवं सुदृढतामाथि तिमीलाई गर्व थियो उनीहरूतिर फर्क ।

[4]तथा प्रकोपको पश्चात तिम्रो समाचार त सोधिहालियोस् कि तिमीमाथि यो के घटित भयो ? कुनप्रकार बित्यो तथा किन बित्यो ? यी प्रश्न उपहास स्वरूप सोधिएका हुन्, अन्यथा विनाशको अंकुसमा कसिए पश्चात उनी उत्तर दिन योग्य कहाँ रहन्थे र ?

[5]अर्थात् जबसम्म जीवनका लक्षण उनमा रहे, उनीहरू आफ्ना अत्याचारलाई स्वीकार गर्दैरहे ।

جَعَلْنَٰهُمْ حَصِيدًا خَٰمِدِينَ ﴿١٥﴾

निभेको अग्नि (को जस्तै) गरिदियौं ।[१]

وَمَا خَلَقْنَا ٱلسَّمَآءَ وَٱلْأَرْضَ وَمَا بَيْنَهُمَا لَٰعِبِينَ ﴿١٦﴾

(१६) हामीले आकाश तथा धर्ती एवं उनका मध्येका कुराहरूलाई आमोद-प्रमोदका लागि बनाएनौं ।[२]

لَوْ أَرَدْنَآ أَن نَّتَّخِذَ لَهْوًا لَّٱتَّخَذْنَٰهُ مِن لَّدُنَّآ إِن كُنَّا فَٰعِلِينَ ﴿١٧﴾

(१७) यदि हामीले यसैप्रकार कीडा-खेल चाहेका भए, त्यसलाई आफ्नो पासबाट बनाइहाल्थ्यौं,[३] यदि हामी यस्तो गर्नेवाला नै भएको भए ।[४]

بَلْ نَقْذِفُ بِٱلْحَقِّ عَلَى ٱلْبَٰطِلِ فَيَدْمَغُهُۥ فَإِذَا هُوَ زَاهِقٌ ۚ وَلَكُمُ

(१८) बरु हामी असत्यमाथि सत्यको प्रहार गर्दछौं, त सत्य, असत्यको टाउको फुटालिदिन्छ तथा त्यो त्यसैबेला ध्वस्त भएर जान्छ ।[५] तिमी

[१] حَصِيدٌ काटिएको खेती तथा خُمُودٌ अग्नि निभ्नेलाई भन्छन् । अन्ततः उनी काटिएको खेती जस्तै भइहाले तथा निभिएको अग्नि जस्तै खरानी थुप्रोमा परिणत भए, कुनै शक्ति, बल तथा संवेदन उनको भित्र रहेन ।

[२] बरु त्यसका कैयन् उद्देश्य तथा कारण छन्, जस्तै भक्त मेरो महिमाको वर्णन तथा कृतज्ञता प्रकट गरून्, पुण्यका कार्य गर्नेवालाहरूलाई उनको राम्रो कामको प्रतिफल तथा नराम्राहरूलाई नराम्रोको दण्ड दिइयोस् आदि ।

[३] अर्थात् आफ्नो पासमा नै केही कुराहरू खेलका निम्ति बनाइहाल्थ्यौं र आफ्नो अभिलाषा पूरा गर्थ्यौं । यत्रो विशाल विश्व ब्रम्हाण्डलाई बनाएर फेरि त्यसमा सुद्धि-वुद्धि राख्नेवाला प्राणी बनाउनुको के आवश्यकता थियो ?

[४] यसका अर्को अनुवाद "हामी गर्नेवाला नै छैनौं" भन्दा "यदि हामी गर्नेवाला नै हुन्थ्यौं" अरबी भाषाका अनुसार अधिक उपयुक्त छ ।

[५] अर्थात् संसारलाई बनाउनुका उद्देश्यहरूमध्ये एउटा महत्वपूर्ण विशेष उद्देश्य यो हो कि सत्य र असत्य बीचको जुन द्वन्द छ र राम्रो तथा नराम्रो बीच जुन लडाइ छ, त्यसमा सत्य र राम्रोलाई विजय प्राप्त गराएर असत्य र नराम्रोमाथि नियन्त्रण राखौं । अर्थात हामी सत्यलाई असत्यमाथि र राम्रोलाई नराम्रोमाथि हान्छौं, जसबाट असत्य र नराम्रोपना समाप्त होस् । دَمْغٌ टाउकोको यस्तो प्रहारलाई भन्दछन्, जुन मस्तिष्कसम्म पुग्छ । زَهَقَ का अर्थ हुन् समाप्त, नष्ट अथवा मरिहाल्नु ।

الْوَيْلُ مِمَّا تَصِفُونَ ﴿١٨﴾

तिमी जुन कुरा बनाउँछौ, ती तिम्रा लागि विनाशकारी छन् ।[१]

وَلَهُ مَنْ فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَمَنْ عِنْدَهُ لَا يَسْتَكْبِرُونَ عَنْ عِبَادَتِهِ وَلَا يَسْتَحْسِرُونَ ﴿١٩﴾

(१९) तथा आकाशहरू एवं धर्तीमा जे-जति छ, उसै (अल्लाह) को हो ।[२] तथा जो उसका समीप छन्[३] उनीहरू उसको इबादत (उपासन) बाट न अहङ्कार गर्दछन् तथा न थाक्छन् ।

يُسَبِّحُونَ اللَّيْلَ وَالنَّهَارَ لَا يَفْتُرُونَ ﴿٢٠﴾

(२०) उनीहरू दिन-रात त्यसको पवित्रताको वर्णन गर्दछन्, तथा अलिकति पनि आलस्य गर्दैनन् ।

أَمِ اتَّخَذُوا آلِهَةً مِنَ الْأَرْضِ هُمْ يُنْشِرُونَ ﴿٢١﴾

(२१) ती मानिसहरूले धर्ती (को सृष्टिमध्ये) बाट जसलाई पूज्य बनाएका छन्, के उनीहरू जीवित गरिदिन्छन् ?[४]

[१]अर्थात प्रभुतिर जुन यसप्रकारका निराधार कुरा सम्बन्धित गर्दछौ अथवा त्यसको विषयमा उत्पन्न गर्दछौ (उदाहरणतः यो जीवन एउटा खेल हो, एउटा खेलाडीको वेकारको शौक हो, आदि), यो तिम्रो विनाशको कारण हो किनभने खेल तमाशा ठान्नुका कारण तिमी सत्यबाट टाढा गइहाल्यौ र असत्यलाई अपनाउनमा कुनै चिन्ता र भयको आभास पनि गर्दैनौ जसको अन्तिम परिणाम तिम्रो विनाश एवं वरवादी नै छ ।

[२]सबै उसैका अधीन र उसैका दास छन् । जब तिमी कुनै दासलाई आफ्नो पुत्र र कुनै दासीलाई आफ्नी पत्नी बनाउनको लागि तयार हुँदैनौ भने अल्लाह तआला आफ्ना अधिनस्थ तथा दासहरू मध्येबाट केहीलाई पुत्र र केहीलाई पत्नी कसरी बनाउन सक्दछ ?

[३]यसबाट अभिप्राय फरिश्ताहरू हुन्, तिनीहरू पनि अल्लाहका दास र भक्त हुन्, यी शब्दहरूबाट उनको प्रतिष्ठा तथा सम्मान प्रदर्शित हुन्छ कि उनी अल्लाहका समीपस्थ हुन् । त्यसका (अल्लाहका) पुत्रीहरू छैनन्, जस्तो कि बहुईश्वरवादीहरुको विश्वास (अस्था) थियो ।

[४] استفهام (प्रश्न) इन्कारको लागि छ, अर्थात् गर्न सक्दैनन्, अनि उनी तिनीहरूलाई जो कुनै प्रकारको शक्ति राख्दैनन्, अल्लाहका साझी (अंशियार) किन बनाउँदछन्, र उनको इवादत (आराधना) किन गर्दछन् ?

لَوْ كَانَ فِيهِمَا آلِهَةٌ إِلَّا اللَّهُ لَفَسَدَتَا ۚ فَسُبْحَانَ اللَّهِ رَبِّ الْعَرْشِ عَمَّا يَصِفُونَ ﴿٢٢﴾

(२२) यदि आकाश तथा धर्तीमा अल्लाहका अतिरिक्त अन्य पनि पूज्य भएको भए दुबैको व्यवस्था बिग्रिहाल्थ्यो (क्षतिग्रस्त भइहाल्थे)।[1] मात्र अल्लाह अर्शको प्रभु प्रत्येक त्यस गुणबाट शुद्ध छ, जुन यी मूर्तिपूजक वर्णन गर्दछन्।

لَا يُسْأَلُ عَمَّا يَفْعَلُ وَهُمْ يُسْأَلُونَ ﴿٢٣﴾

(२३) त्यो आफ्ना कार्यहरूका लागि (कसै समक्ष) उत्तरदायी छैन तथा सबै (उसका समक्ष) उत्तरदायी छन्।

أَمِ اتَّخَذُوا مِن دُونِهِ آلِهَةً ۖ قُلْ هَاتُوا بُرْهَانَكُمْ ۖ هَٰذَا ذِكْرُ مَن مَّعِيَ وَذِكْرُ مَن قَبْلِي ۗ بَلْ أَكْثَرُهُمْ لَا يَعْلَمُونَ الْحَقَّ ۖ فَهُم مُّعْرِضُونَ ﴿٢٤﴾

(२४) के उनीहरूले अल्लाहका अतिरिक्त अन्य आराध्य बनाएका छन् उनीहरूसित भन, ल्याउ आफ्नो प्रमाण प्रस्तुत गर। यो हो पुस्तक उनीहरूको जो मसँग छन् तथा मभन्दा पूर्ववालाको प्रमाण।[2] कुरो यो हो कि उनीहरूमध्ये अधिकांश सत्यताबाट अनभिज्ञ छन्, यसैकारण विमुख छन्।

[1]अर्थात् यदि वास्तवमा आकाश र धर्तीका दुई ईश्वर भएको भए यस विश्वका अधिकारी दुई शक्तिहरू हुन्थे, दुईका विचार, बुद्धि तथा इच्छा कार्य गर्थ्यो र जब दुईका इच्छा र निर्णय विश्वमा चल्थ्यो भने यो विश्वको उचित व्यवस्था रहन सक्दैनथ्यो, जुन आदिदेखि बिना कुनै बाधा चलिआइराखेको छ। किनभने दुबैको इच्छामा परस्पर टकराव (विवाद) हुन्थ्यो तथा दुबैका इच्छा एक-अर्काका विपरीत दिशामा प्रयोग हुन्थे जसको परिणाम विखण्डन र विनाशको रूपमा उत्पन्न हुन्थ्यो, र अहिलेसम्म यस्तो भएन, तसर्थ यसको प्रस्ट अर्थ यो हो कि विश्वमा मात्र एउटै अस्तित्व छ, जसको इच्छा र आदेश चल्दछ, जे-जति पनि हुन्छ, मात्र उसैको आदेशमा हुन्छ। उसले प्रदान गरिएको कुरोलाई कोही रोक्न सक्दैन र जसबाट त्यो आफ्नो दया रोक्दछ, त्यसलाई दिनेवाला कोही छैन।

[2]ذِكْرُ مَن مَّعِيَ बाट कुरआन र दोस्रो ذِكْر बाट पहिलाका आकाशीय किताबहरू तात्पर्य हुन्। अर्थात कुरआन त्यसभन्दा पहिलाका अन्य आकाशीय किताबहरूमा, केवल एक प्रभुको पूज्य एवं पालनकर्ता हुनुको वर्णन पाइन्छ, परन्तु यी मुशरिकहरू यस सत्यलाई स्वीकार गर्दैनन् र यथापूर्वक यस एकेश्वरवादबाट विमुख छन्।

وَمَآ أَرْسَلْنَا مِن قَبْلِكَ مِن رَّسُولٍ إِلَّا نُوحِىٓ إِلَيْهِ أَنَّهُۥ لَآ إِلَٰهَ إِلَّآ أَنَا۠ فَٱعْبُدُونِ ﴿٢٥﴾

(२५) र हामीले तिमीभन्दा पहिला जुन रसूल (सन्देशवाहक) पनि पठायौं उसतिर यही वह्य (ईशवाणी) अवतरित (नाज़िल) गऱ्यौं कि मेरो अतिरिक्त कोही सत्य पूज्य छैन, तसर्थ तिमी सबै मेरै इबादत (उपासना) गर ।[1]

وَقَالُوا۟ ٱتَّخَذَ ٱلرَّحْمَٰنُ وَلَدًا ۗ سُبْحَٰنَهُۥ ۚ بَلْ عِبَادٌ مُّكْرَمُونَ ﴿٢٦﴾

(२६) र (मिश्रणवादी) भन्दछन् रहमान (कृपालु) का सन्तान हुन् (गलत छ) त्यो पवित्र छ । बरु उनीहरू (जसलाई यिनीहरू पुत्र ठानिराखेका छन्) उसका सम्मानित भक्त हुन् ।

لَا يَسْبِقُونَهُۥ بِٱلْقَوْلِ وَهُم بِأَمْرِهِۦ يَعْمَلُونَ ﴿٢٧﴾

(२७) त्यसका (अल्लाहका) समक्ष बढ्ता बोल्दैनन्, र त्यसका आदेशहरूमा कार्यरत छन् ।[2]

يَعْلَمُ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ وَلَا يَشْفَعُونَ إِلَّا لِمَنِ ٱرْتَضَىٰ وَهُم مِّنْ خَشْيَتِهِۦ مُشْفِقُونَ ﴿٢٨﴾

(२८) त्यो उनका पूर्व तथा पश्चातका सबै स्थितिहरूबाट अवगत छ, र उनीहरू कसैको पनि सिफारिश गर्दैनन् मात्र तिनीहरूको जोसित त्यो (अल्लाह) प्रसन्न हुन्छ।[3] उनीहरू त स्वयं कंपित तथा भयभीत रहन्छन् ।

وَمَن يَقُلْ مِنْهُمْ إِنِّىٓ إِلَٰهٌ مِّن دُونِهِۦ فَذَٰلِكَ نَجْزِيهِ جَهَنَّمَ ۚ

(२९) र उनीहरूमध्ये कोही भन्छ कि अल्लाहका अतिरिक्त म इलाह (पूजनीय) छु, त हामील

---

[1]अर्थात् सबै पैग़म्बर यही अल्लाहको एक हुने कुराको सन्देश लिएर आए ।

[2]यसमा मुशरिकहरूका विचारको खण्डन हुन्छ, जो फरिश्ताहरूलाई अल्लाहका छोरीहरू भन्ने गर्दथे, उनी पुत्रीहरू होइनन्, त्यसका सम्मानित भक्त (फरिश्ताहरू) र त्यसका आज्ञाकारी हुन् ।

[3]यसबाट विदित भयो कि नबी र पुनीत मानिसहरू (सालेह) का अतिरिक्त फरिश्ताहरू पनि सिफारिश गर्नेछन् । सहीह हदीसबाट पनि यसको समर्थन पाइन्छ। परन्तु यी सिफारिशहरू तिनै प्रति हुनेछन् जसका लागि अल्लाह तआला चाहनेछ । तथा प्रत्यक्ष कुरो छ कि अल्लाह तआला यो सिफारिश आफ्ना अवज्ञाकारी भक्तहरूका लागि होइन, बरु केवल पापी परन्तु आज्ञाकारी मानिसहरू अर्थात् ईमानवाला र एकेश्वरवादीहरूका लागि रूचाउनेछ ।

كَذَٰلِكَ نَجْزِي الظَّٰلِمِينَ ﴿٢٩﴾

त्यसलाई नरकको सँजाय दिनेछौं ।[1] हामी अत्याचारीहरूलाई यसैप्रकार दण्ड दिन्छौं ।

أَوَلَمْ يَرَ الَّذِينَ كَفَرُوٓا أَنَّ السَّمَٰوَٰتِ وَالْأَرْضَ كَانَتَا رَتْقًا فَفَتَقْنَٰهُمَا ۖ وَجَعَلْنَا مِنَ الْمَآءِ كُلَّ شَيْءٍ حَيٍّ ۖ أَفَلَا يُؤْمِنُونَ ﴿٣٠﴾

(३०) के काफ़िरहरूले यो देखेनन्[2] कि (यी) आकाश तथा धर्ती (सबै) आपसमा जोडिएका थिए, पछि हामीले तिनलाई अलग-अलग गर्‍यौं[3] र प्रत्येक जीवितलाई हामीले पानीबाट पैदा गर्‍यौं ।[4] के यिनीहरू तैपनि विश्वास गर्दैनन् ?

---

[1]अर्थात यी फरिश्ताहरू मध्येबाट पनि कोही ईलाह (पूजनीय) हुने दावी गर्दछ भने त्यसलाई पनि नरकमा फ्याँकिदिनेछौं । यो प्रतिबन्धित वाक्य हो, जसको हुनु आवश्यक छैन । यसबाट तात्पर्य शिर्कलाई नकार्नु र तौहीदको समर्थन हो । जस्त

﴿ قُلْ إِن كَانَ لِلرَّحْمَٰنِ وَلَدٌ فَأَنَا۠ أَوَّلُ الْعَٰبِدِينَ ﴾

"(हे नबी) ! भन, यदि रहमान (कृपाशील) को कुनै सन्तान छ भने सबभन्दा पहिला म उपासना (इबादत) गर्नेवाला हुनेछु ।" (सुर: जुखुरफ़-८१)

﴿ لَئِنْ أَشْرَكْتَ لَيَحْبَطَنَّ عَمَلُكَ ﴾

"(हे नबी) ! यदि तिमीले पनि शिर्क गर्‍यौ, भने तिम्रा सारा कर्म खेर जानेछन् ।" (सूर: अल-जुमर-६५)

यी सबै कुराहरू प्रतिबन्धित छन् जसको हुनु अनावश्यक छ ।

[2]यसको अर्थ आँखाले देख्नु होइन, बरु हृदयको आँखाले देख्नु हो । अर्थात् के उनीहरूले सोच-विचार गरेनन् अथवा उनीहरूले जानेनन् ?

[3] رَتْقٌ को अर्थ हो बन्द र فَتْقٌ को अर्थ च्यात्नु, खोल्नु, अलग-अलग पार्नु । अर्थात् आकाश र धर्ती आदिकालमा आपसमा एक-अर्कासित एकैमा जुटेका थिए । हामीले उनलाई एक-अर्काबाट अलग गर्‍यौं । आकाशलाई माथि पार्‍यौं, जसबाट वर्षा हुन्छ, र धर्तीलाई आफ्नो ठाउँमा रहन दियौ र त्यो उब्जनीको योग्य भयो ।

[4]यसको अर्थ वर्षा र स्रोतहरूको पानी हो । तैपनि स्पष्ट रहोस् कि यसबाट चिसोपना हुन्छ र हरेक जीवितलाई नवजीवन दिन्छ र यदि यसको अर्थ वीर्य हो भने यसमा पनि कुनै कठिनाई छैन, किनभने हर जीवितका अस्तित्वका कारण ती पानीका थोपा हुन्, जुन पुरुषको पिठ्यूँबाट निस्कन्छ र स्त्रीको गर्भाशयमा गई एउटा नयाँ प्राणीलाई जन्म दिनुको कारण बन्दछ ।

وَجَعَلْنَا فِي الْأَرْضِ رَوَاسِيَ أَن تَمِيدَ بِهِمْ وَجَعَلْنَا فِيهَا فِجَاجًا سُبُلًا لَّعَلَّهُمْ يَهْتَدُونَ ﴿٣١﴾

(३१) र हामीले धर्तीमा पर्वत बनाइदियौं, ताकि त्यो सृष्टिलाई हल्लाउन नसकोस् ।[1] र हामीले यसमा उनका मध्ये विस्तृत मार्ग बनाइदियौं[2] ताकि उनी मार्ग प्राप्त गर्न सकून् ।

وَجَعَلْنَا السَّمَاءَ سَقْفًا مَّحْفُوظًا ۖ وَهُمْ عَنْ آيَاتِهَا مُعْرِضُونَ ﴿٣٢﴾

(३२) र आकाशलाई हामीले एक सुरक्षित छत बनायौं ।[3] परन्तु उनीहरू त्यसका निशानीहरूमा ध्यान दिंदैनन् ।

وَهُوَ الَّذِي خَلَقَ اللَّيْلَ وَالنَّهَارَ وَالشَّمْسَ وَالْقَمَرَ ۖ

(३३) र त्यही (अल्लाह) हो जसले रात र दिन एवं सूर्य र चन्द्रमालाई बनायो ।[4] तिनीहरूमा

[1]अर्थात् यदि धर्तीमा यी ठूला-ठूला पर्वत नभएको भए, धर्ती सधैं हल्लिरहन्थ्यो, जसका कारण सबै जीव-जन्तुका लागि यस धर्तीमा घर र बाटो बन्न सक्दैनथे । हामीले धर्तीमा पहाडहरूको माला राखेर यसलाई कम्पनबाट रोकिदियौं ।

[2]यसको अर्थ धर्ती अथवा पहाड हो । अर्थात् धर्तीमा फराकिला मार्ग बनाइदियौं अथवा पर्वतमालाका मध्ये घाटी बनाएर धर्तीका अरु भागमा जानका लागि मार्ग बनायौं । يهتدون को एउटा अर्को भावार्थ यो पनि हुनसक्छ कि उनी यी मार्गबाट यात्रा गरी आफ्नो जीवनयापन व्यवस्था अथवा आवश्यकताहरू पूरा गर्न सकून् ।

[3] سقفا محفوظا धर्तीको लागि सुरक्षित छत जुनप्रकारले टेन्टको छत हुन्छ । अथवा यी अर्थहरूमा सुरक्षित कि त्यसलाई धर्तीमा खस्नुबाट रोकेको छ, अन्यथा यदि आकाश धर्तीमा खस्छ भने धर्तीको सारा नियम अस्त-व्यस्त हुनसक्छ । अथवा शैतानहरूबाट सुरक्षित । जस्तो कि सूर: अल-हिज्रको आयत संख्या १७ मा भनेको छ :

﴿وَحَفِظْنَاهَا مِن كُلِّ شَيْطَانٍ رَّجِيمٍ﴾

"तथा त्यसलाई हामीले प्रत्येक धिक्कृत शैतानबाट सुरक्षित गर्‍यौं ।"

[4]अर्थात् रातलाई आराम र दिनलाई कामको लागि बनायौं, सूरजलाई दिनको निशानी र चाँदलाई रातको निशानी बनायौं, ताकि महिना र सालहरूको हिसाब लगाउन सकियोस्, जुन मानिसको लागि विशेष आवश्यकता हो ।

كُلٌّ فِي فَلَكٍ يَسْبَحُونَ ۝٣٣

सबै आ-आफ्ना कक्षमा तैरिराखेका छन् ।[1]

وَمَا جَعَلْنَا لِبَشَرٍ مِّن قَبْلِكَ الْخُلْدَ ۖ أَفَإِن مِّتَّ فَهُمُ الْخَالِدُونَ ۝٣٤

(३४) र तपाईंभन्दा पहिला हामीले कुनै पनि व्यक्तिलाई नित्यता दिएनौं । त के यदि तपाईं मर्नु भयो भने त यी सधैंका लागि रहनेछन् ?[2]

كُلُّ نَفْسٍ ذَائِقَةُ الْمَوْتِ ۗ وَنَبْلُوكُم بِالشَّرِّ وَالْخَيْرِ فِتْنَةً ۖ وَإِلَيْنَا تُرْجَعُونَ ۝٣٥

(३५) हरेक जीवलाई मृत्युको स्वाद चाख्नुछ । र हामी परीक्षाका निम्ति तिमीलाई राम्रो-नराम्रोमा पार्दछौं ।[3] र तिमी सबै हामीतिर फर्केर आउनेछौ ।[4]

وَإِذَا رَآكَ الَّذِينَ كَفَرُوا

(३६) र जसले कुफ्र (अविश्वास) गरे, उनीहरू जब तिमीलाई देख्दछन्, त मात्र

---

[1]जुनप्रकारले तैरने व्यक्ति जलको सतहमा तैरन्छ, त्यसैप्रकारले चन्द्रमा र सूर्य आफ्ना कक्षमा आफ्ना निर्धारित गतिले गतिमान छन् ।

[2]यो काफिरहरूको उत्तरमा छ जुन उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) का बारेमा भन्दथे कि एक दिन तपाईंले मरेरनै जानुछ । अल्लाह तआलाको आदेश भयो कि मृत्यु त प्रत्येक व्यक्तिलाई आउनु नै छ र यस अनुसार अवश्य मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम पनि यस नियमबाट अलग हुनुहुन्न । किनभने उनी पनि मनुष्य नै हुन्, र हामीले कुनै मनुष्यलाई सधैंका निम्ति यस धर्तीमा जीवित रहनका लागि छाडेका छैनौं । यसको अर्थ यो त होइन कि के यो कुरा भन्नेवाला यस धर्तीमा जीवित रहनेछन् ? यसबाट मूर्तिपूजक र कब्र पूज्नेवालाहरूको पनि खण्डन भइहाल्यो, जो देवता, नबी, महापुरुषहरूको सधैं जीवित रहने कुराको भ्रम राख्दछन्, यसै आधारमा उनलाई आफ्ना दुखहारी, संकटमोचन ठान्दछन् । यस त्रुटिपूर्ण भ्रमबाट हामी अल्लाहको शरण चाहन्छौं ।

[3]अर्थात् कहिले दुख-दर्दमा घेरेर, कहिले सांसारिक सुविधाबाट, कहिले स्वास्थ तथा वैभवबाट, कहिले अभाव, रोगबाट, कहिले धन-सम्पत्ति दिएर, कहिले भोक-तिर्खा दिएर हामी परीक्षा लिन्छौं ताकि हामीले हेर्न सकौं कि को कृतज्ञ छ र को कृतघ्न ? को धैर्य राख्दछ र को सहन सक्दैन ? धन्य र धैर्य प्रभुलाई प्रसन्न गर्ने कुरा हुन् र कृतघ्नता र अधैर्य त्यस प्रभुका प्रकोपका कारण हुन् ।

[4]त्यहाँ तिम्रा कर्महरूका अनुसार राम्रो वा नराम्रो फल प्राप्त हुनेछ, उपरोक्त मानिसहरूका लागि भलाई (राम्रो) र शेषका लागि नराम्रो छ ।

إِن يَتَّخِذُونَكَ إِلَّا هُزُوًا أَهَٰذَا الَّذِي يَذْكُرُ آلِهَتَكُمْ وَهُم بِذِكْرِ الرَّحْمَٰنِ هُمْ كَافِرُونَ ﴿٣٦﴾

तिम्रो उपहास गर्दछन्, (भन्दछन्) कि के यही त्यो हो जो तिम्रा देवताहरू (पूज्य) को चर्चा नराम्रोसँग गर्दछ ? र ती स्वयं नै रहमान (कृपालु) को महिमा (स्मरण) गर्नबाट इन्कार गर्दछन् ।[1]

خُلِقَ الْإِنسَانُ مِنْ عَجَلٍ سَأُورِيكُمْ آيَاتِي فَلَا تَسْتَعْجِلُونِ ﴿٣٧﴾

(३७) मनुष्य जन्मजात उत्ताउलो छ । म तिमीलाई आफ्नो निशानीहरू (लक्षण) शीघ्र नै देखाउनेछु , तिमी मसँग हतार नगर ।[2]

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٣٨﴾

(३८) र भन्दछन् कि यदि साँचो हौ भने भन कि त्यो वाचा (यातना) कहिले पूरा हुनेछ ।

لَوْ يَعْلَمُ الَّذِينَ كَفَرُوا حِينَ لَا يَكُفُّونَ عَن وُجُوهِهِمُ النَّارَ

(३९) यदि यी काफिरहरू जानेका भए कि त्यसबेला न त यिनी आगोलाई आफ्ना अनुहारहरूबाट हटाउन सक्नेछन्

[1]यसको पश्चात पनि यिनीहरू रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको हाँसो गर्दछन् जसरी अर्को स्थानमा आदेश पायो :

﴿وَإِذَا رَأَوْكَ إِن يَتَّخِذُونَكَ إِلَّا هُزُوًا أَهَٰذَا الَّذِي بَعَثَ اللَّهُ رَسُولًا﴾

"जब (हे पैगम्बर !) यी मक्काका कुफ्फार तिमीलाई देख्दछन्, त तिम्रो उपहासमा लागिहाल्छन्, भन्दछन् कि यही हो त्यो व्यक्ति जसलाई अल्लाहले रसूल बनाएर पठाएको छ ।" (सूर: अल-फुरकान-४१)

[2]यो काफिरहरूको प्रकोप माँग को उत्तरमा छ किनभने मनुष्य प्राकृतिक रुपले उत्ताउलो छ र उत्ताउलोपनामा त्यो पैगम्बरसित पनि शीघ्र माँग गरिहाल्छ कि आफ्नो अल्लाहसित भनेर तुरुन्त प्रकोप गराइदेउ । अल्लाहले भन्नुभयो : "म छिटै आफ्ना निशानीहरू देखाउनेछु । यी निशानीहरूको अर्थ प्रकोप पनि हुनसक्छ र रसूलको सत्यताको प्रमाण पनि ।"

وَلَا عَنْ ظُهُوْرِهِمْ وَلَا هُمْ يُنْصَرُوْنَ ۝٣٩

र आफ्ना पिठ्यूँबाट, र न यिनीहरूलाई सहायता गरिनेछ ।[1]

بَلْ تَأْتِيْهِمْ بَغْتَةً فَتَبْهَتُهُمْ فَلَا يَسْتَطِيْعُوْنَ رَدَّهَا وَلَا هُمْ يُنْظَرُوْنَ ۝٤٠

(४०) हो अवश्य नै वाचाको समय (क़ियामतको दिन) उनीहरू छेउ एक्कासि (अकस्मात) आउनेछ र उनीहरूलाई त्यसले आश्चर्य चकित गर्नेछ ।[2] अनि त यिनीहरू न त्यसलाई हटाउन सक्नेछन् र न तिनीहरूलाई अलिकति पनि समय दिइनेछ ।[3]

وَلَقَدِ اسْتُهْزِئَ بِرُسُلٍ مِّنْ قَبْلِكَ فَحَاقَ بِالَّذِيْنَ سَخِرُوْا مِنْهُمْ مَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ۝٤١

(४१) र तिमीभन्दा पहिला रसूलहरूको पनि उपहास गरियो त जसले उपहास गरे उनीहरूलाई नै त्यस वस्तुले आइ घेऱ्यो जसको उनी उपहास गर्दथे ।[4]

[1]यसभित्र उत्तर लुप्त छ, अर्थात् यदि यिनीहरूले जानेका भए प्रकोपको माँग गर्दैनथे अथवा अवश्य थाहा पाइहाल्थे कि प्रलय (केयामत) आउनेवाली छ वा कुफ्रमा अडिग रहँदैनथे र ईमान ल्याउँथे ।

[2]अर्थात् उनको बुद्धिमा केही आउने छैन कि उनीहरू के गरून् ।

[3]कि त्यो तौबा (पश्चाताप) इस्तग़फ़ार (क्षमा-याचना) गरून् ।

[4]रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिइँदैछ कि मुशरेकीनका उपहासबाट नआत्तिनुस्, यो कुरो नयाँ होइन । तिमीभन्दा पहिला आउनेवाला पैग़म्बरहरूसँग पनि यस्तै भएको छ । अन्ततः त्यही प्रकोप उनीमाथि फर्किहाल्यो अर्थात उनलाई घेऱ्यो, जसको उनीहरू हाँसो गर्दथे र जसको आउने कुरो उनका विचारले असम्भव थियो । जुनप्रकार अर्को स्थानमा आदेश गऱ्यो :

﴿وَلَقَدْ كُذِّبَتْ رُسُلٌ مِّنْ قَبْلِكَ فَصَبَرُوْا عَلٰى مَا كُذِّبُوْا وَأُوْذُوْا حَتّٰى أَتٰهُمْ نَصْرُنَا﴾

"तिमीभन्दा पहिला पनि रसूलहरु भूठ्लाइए, तर उनीहरूले हाँसोमाथि र ती सबै कष्टहरूमाथि जुन उनीहरूलाई दिइएको थियो धैर्य धारण गरे, यहाँसम्मकि उनीछेउ हाम्रो मद्दत (सहायता) आइपुग्यो । (सूरः अल-अनआम-३४)

रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वनाको साथ काफ़िरहरूका लागि सावधानी एवं चेतावनी पनि छ ।

قُلْ مَنْ يَّكْلَؤُكُمْ بِالَّيْلِ وَ النَّهَارِ مِنَ الرَّحْمٰنِ ؕ بَلْ هُمْ عَنْ ذِكْرِ رَبِّهِمْ مُّعْرِضُوْنَ ﴿٤٢﴾

(४२) उनीसँग सोध्नुस् कि रहमान (कृपालु) को दाँजोमा रात र दिन तिम्रो रक्षा कसले गर्नसक्छ ?[1] बरु (कुरो यो छ कि) यिनी आफ्नो प्रभुको महिमा (जिक्र) सुमिरन गर्नबाट विमुख छन् ।

اَمْ لَهُمْ اٰلِهَةٌ تَمْنَعُهُمْ مِّنْ دُوْنِنَا ؕ لَا يَسْتَطِيْعُوْنَ نَصْرَ اَنْفُسِهِمْ وَلَا هُمْ مِّنَّا يُصْحَبُوْنَ ﴿٤٣﴾

(४३) के हामीबाहेक उनका कोही अन्य ईलाह (पूजनीय) छन्, जो उनीहरूलाई आपदाबाट बचाउँछन् ? कोही पनि स्वयं आफ्नो सहायता गर्ने शक्ति राख्दैन, र न कोही हाम्रो तर्फबाट सहायता दिन्छ, न कोही हाम्रो साथ (सहायता) दिइन्छ ।[2]

بَلْ مَتَّعْنَا هٰٓؤُلَآءِ وَاٰبَآءَهُمْ حَتّٰى طَالَ عَلَيْهِمُ الْعُمُرُ ؕ اَفَلَا يَرَوْنَ اَنَّا نَاْتِي الْاَرْضَ نَنْقُصُهَا مِنْ اَطْرَافِهَا ؕ

(४४) बरु हामीले यिनीहरूलाई र यिनका पूर्वजहरूलाई जीवनसामग्री दियौं यहाँसम्मकि उनीहरूको आयुमा सीमा समाप्त भइहाल्यो ।[3] के उनी देख्दैनन् कि हामी भूमिलाई त्यसका किनाराहरूबाट

[1]अर्थात् तिम्रा कर्म यस्ता छन् कि दिन वा रात कुनै पनि समय तिमीमाथि प्रकोप आउन सक्छ । यस प्रकोपबाट तिम्रो दिनरात कसले रक्षा गर्दछ ? के अल्लाहका अतिरिक्त पनि अन्य कोही छ जो त्यसको प्रकोपबाट तिम्रो रक्षा गर्न सक्दछ ?

[2]यसको अर्थ हो ولاهم يجارون من عذابنا "न उनी हाम्रो प्रकोपबाट नै सुरक्षित छन् ।" अर्थात् ती स्वयं आफ्नो सहायतामा तथा अल्लाहको प्रकोपबमाट बच्ने शक्ति राख्दैनन्, र फेरि उनीहरूकै जस्तै उनको सहायता के हुनुछ र उनी तिनीहरूलाई प्रकोपवाट कुन प्रकारले बचाउन सक्दछन् ?

[3]अर्थात् उनको अथवा उनको पूर्वजहरूको जीवन सुख-शान्तिसँग व्यतीत भयो, त के उनी यो ठान्दछन् कि उनी सोझो मार्गमा थिए र भविष्यमा पनि उनीहरूलाई केही हुनेछैन ? होइन, बरु यो क्षणिक जीवन त हाम्रो अवसर दिनुका नियमको एउटा भाग हो, जसबाट कोही पनि धोखामा बस्नु हुँदैन ।

أَفَهُمُ الْغَٰلِبُونَ ﴿٤٤﴾

घटाउँदै आइराखेका छौं ?[१] त अब के तिनै विजयी छन् ?[२]

قُلْ إِنَّمَآ أُنذِرُكُم بِالْوَحْيِ ۚ وَلَا يَسْمَعُ الصُّمُّ الدُّعَآءَ إِذَا مَا يُنذَرُونَ ﴿٤٥﴾

(४५) भनिदेउ कि म त केवल तिमीलाई अल्लाहका वह्यद्वारा सचेत गर्दछु तर कान नसुन्ने व्यक्ति पुकारलाई सुन्दैनन्, जबकि उनीहरूलाई सचेत गरिराखिएको होस् ।[३]

وَلَئِن مَّسَّتْهُمْ نَفْحَةٌ مِّنْ عَذَابِ رَبِّكَ لَيَقُولُنَّ يَٰوَيْلَنَآ إِنَّا كُنَّا ظَٰلِمِينَ ﴿٤٦﴾

(४६) र यदि उनीहरूलाई तिम्रो प्रभुका प्रकोपको स्पर्श पनि लाग्छ भने कराउन थाल्छन् कि हाय हाम्रो विनाश ! नि:सन्देह हामी पापी थियौं ।[३]

وَنَضَعُ الْمَوَٰزِينَ الْقِسْطَ لِيَوْمِ الْقِيَٰمَةِ فَلَا تُظْلَمُ نَفْسٌ شَيْـًٔا ۖ وَإِن كَانَ مِثْقَالَ حَبَّةٍ مِّنْ خَرْدَلٍ

(४७) र हामी प्रलयका दिन उनकामध्ये स्वच्छ तौलको तराजु ल्याइराख्नेछौं, अनि कसैमाथि कुनै प्रकारको अत्याचार गरिने छैन, र यदि एउटा रायोको गेडाको बराबर पनि

[१]अर्थात् कुफ्रका खुट्टामुनिबाट धर्ती खस्किरहेको छ र इस्लाम विजेताको रुपमा अग्रसर छ र मुसलमान एक भू-भागपछि अर्को भूभाग जितिरहेका छन् ।

[२]अर्थात् कुफ्रलाई खुम्चिराखेको र इस्लामलाई बढिराखेको देखेर पनि, के ती काफ़िर यो ठान्दछन् कि उनी विजयी छन् ? यसको उत्तर नकारात्मक नै छ । विजयी होइन पराजित छन्, आदरणीय होइन अनादर, अनिष्ठ अपमान उनको भाग्य हो ।

[३]अर्थात् कुर्‌आन सुनाएर उनलाई शिक्षा-दीक्षा दिइराखेको छु । र यही मेरो जिम्मेवारी र पद हो । तर जसका कानलाई अल्लाहले सत्य सुन्नबाट बहिरो गरिदिएको छ, उनका आँखामाथि आवरण पारिदिएको छ, र हृदयहरूमाथि मोहर छाप लगाइदिएको छ । उनीमाथि यस कुर्‌आनको शिक्षा-दीक्षाको अलिकति पनि प्रभाव पर्दैन ।

[४]अर्थात् प्रकोपको एउटा सानो झट्का अथवा सानो भाग पनि पुग्दछ भने, त कराइहाल्ने छन् र आफ्ना पापलाई स्वयं स्वीकार गर्न थाल्नेछन् ।

آتَيْنَا بِهَا ۗ وَكَفَىٰ بِنَا حَاسِبِينَ ﴿٤٧﴾

(कर्म) हुनेछ, त्यसलाई हामी अगाडी ल्याउनेछौं । र हामी हिसाब गर्नका निम्ति पर्याप्त छौं ।[1]

وَلَقَدْ آتَيْنَا مُوسَىٰ وَهَارُونَ الْفُرْقَانَ وَضِيَاءً وَذِكْرًا لِّلْمُتَّقِينَ ﴿٤٨﴾

(४८) र यो पूर्णरुपले सत्य छ कि हामीले मूसा र हारुनलाई निर्णयकारी ज्योर्तिमय तथा सदाचारीहरूका लागि शिक्षाप्रद किताब प्रदान गरेका छौं ।

الَّذِينَ يَخْشَوْنَ رَبَّهُم بِالْغَيْبِ وَهُم مِّنَ السَّاعَةِ مُشْفِقُونَ ﴿٤٩﴾

(४९) ती मानिसहरू जो परोक्षमा आफ्ना प्रभुसित तर्सन्छन् र जो प्रलयको (विचार) ले काम्दै रहन्छन् ।

---

[1] موازين - ميزان (तराजू) को बहुवचन हो । कर्महरूलाई जोख्नका निम्ति क़ेयामतका दिन या त कैयन् तराजू हुनेछन् अथवा तराजू एउटै हुनेछ, तर त्यसको विशेष महत्वको लागि वा कर्महरूको संख्या अनुसार यसलाई बहुवचनको रुपमा प्रयोग गरिएको छ । मनुष्यका कर्म भौतिक होइन अर्थात् यिनको प्रत्यक्ष रुपले कुनै आकार त छैन, अनि त्यसलाई कुन प्रकारले जोखिने छ ? यो प्रश्न आजभन्दा पहिलासम्म त शायद कुनै विशेषता राख्दथे । परन्तु आजका वैज्ञानिक आविष्कारले यसलाई सम्भव बनाइदिएको छ । अब यी आविष्कारहरूद्वारा निराकार र बिना भारका वस्तुहरूलाई पनि नाप्न जोख्न थालिएको छ । जब मनुष्य यो सामर्थ्य राख्दछ, त अल्लाह तआलाका लागि ती कर्महरूलाई जुन निराकार गुण हुन्, जोख्न कति पो कठिन कार्य छ । उसको त महिमा नै अपार على كل شيء قدير छ । यसका अतिरिक्त यो पनि हुनसक्छ कि त्यसले यी निराकार गुणहरूलाई मनुष्यलाई देखाउनको निम्ति साकार बनाइदेओस् र त्यसपछि जोखोस् । जस्तो कि केही हदीसहरूमा केही कर्महरूका साकार हुने कुराका प्रमाण पाईन्छन् । उदाहरणत: कुर्आनलाई कण्ठस्थ गर्नेवालाहरूको निम्ति कुर्आन एउटा सुन्दर युवकको रुपमा आउनेछ, त्यो व्यक्तिले प्रश्न गर्नेछ कि तिमी को हौ ? त्यो भन्नेछ कि म कुर्आन हूँ, जसलाई तिमी रातहरू (रातहरूका नमाज़मा) नसुति र दिनमा पानी नपिइ पढ्ने गर्दथ्यौ । (मुसनद अहमद ५/३५२, इब्ने माजा, किताबुल अदब, भाग कुर्आनका पुण्य) यसैप्रकार मोमिनको कब्र (समाधि) मा राम्रो कर्म एउटा राम्रो रङ्ग र सुगन्धित भएको युवकको आउनेछ र काफ़िर, मुनाफ़िकका पासमा यसको विपरीत रुपमा । (मुसनद अहमद ५/२८७) यसको अन्य व्याख्याका लागि सूर: आराफ़-७ को टिप्पणी हेर्नुस् । القسط धातु तथा الموازين को विशेषता हो । अर्थ हो न्याय गर्ने तराजू अथवा तराजूहरू ।

وَهٰذَا ذِكْرٌ مُّبٰرَكٌ اَنْزَلْنٰهُ ۭ اَفَاَنْتُمْ لَهٗ مُنْكِرُوْنَ ۝

(५०) र यो शिक्षाप्रद, शुभकारक कुरआन हामीले नै उतारेका हौं, तैपनि तिमी के यसबाट इन्कार गर्दछौ ?[1]

وَلَقَدْ اٰتَيْنَآ اِبْرٰهِيْمَ رُشْدَهٗ مِنْ قَبْلُ وَكُنَّا بِهٖ عٰلِمِيْنَ ۝

(५१) र अवश्य नै हामीले त्यसभन्दा पहिला इब्राहीमलाई प्रबोध प्रदान गरेका थियौं,[2] र त्यसको स्थितिसित राम्ररी परिचित थियौं ।[3]

اِذْ قَالَ لِاَبِيْهِ وَقَوْمِهٖ مَا هٰذِهِ التَّمَاثِيْلُ الَّتِيْٓ اَنْتُمْ لَهَا عٰكِفُوْنَ ۝

(५२) जब उसले आफ्नो पिता र आफ्नो कौम (जाति) सित भन्यो कि यी मूर्तिहरू, जसका तिमी पूजारी बनिहालेका छौ यी के हुन् ?[4]

---

[1]यो कुरआन, जुन सावधान हुनेवालाहरूका लागि स्मृति एवं शिक्षा हो र भलो एवं उन्नतिप्रद छ, त्यसलाई पनि हामीले नै अवतरित गरेका छौं, तिमी यसको مُنَزَّل من الله "अल्लाहको तर्फबाट अवतरित" हुने कुरोबाट किन इन्कार गर्दछौ जबकि तिमीलाई स्वीकार छ कि तौरात अल्लाहको तर्फबाट नै अवतरित किताब हो ।

[2] من قبل को अर्थ या त यो हो कि हज़रत इब्राहीमलाई ज्ञान (शिक्षा एवं बुद्धि) दिने कथा हज़रत मूसालाई तौरात दिनुभन्दा पहिलाको हो । अथवा यो अर्थ हो कि हज़रत इब्राहीमलाई नबी हुनुभन्दा पहिला नै ज्ञान प्रदान गरिएको थियो ।

[3]अर्थात् हामी जान्दथ्यौं कि त्यो यस ज्ञानको अधिकारी छ र त्यसले उचित प्रयोग गर्नेछ ।

[4]تماثيل ، تمثال को बहुवचन हो । यो वास्तवमा कुनै वस्तुको प्रतिमालाई भन्दछन् । जस्तै ढुङ्गाको मूर्ति अथवा काग़ज र भित्ता आदिमा कसैको चित्र । यहाँ तात्पर्य ती मूर्तिहरू हुन् जुन हज़रत इब्राहीमको जातिले आफ्ना पूर्वजहरूको बनाएका थिए र जसका उनी पूजा गर्दथे । عكوف - عاكف बाट कारकको रुप हो, जसको अर्थ आवश्यक रुपले समात्नु र त्यसमा स्थिर भई बसिएको हो, यसैबाट اعتكاف छ, जसमा मनुष्य अल्लाहको इबादतको लागि एकाग्रताका साथ, पूर्णरुपले स्थिर भई बसिहाल्छ । यहाँ यसको अर्थ मूर्तिहरूको आदर र पूजा तथा उनका स्थानहरूमा पूजारी बनी बस्नुभयो । यी प्रतिमाहरू (मूर्ति र चित्र) कब्रपूजकहरू एवं विशिष्ट व्यक्तिका भक्तहरूमाथि पनि अचेल लागू हुन्छ र उनलाई बडो आदर-सत्कारका साथ घर र दुकानहरूमा शुभका लागि झुण्ड्याइन्छन् । अल्लाह तआलाले उनीहरूलाई सुबुद्धि (सन्मति) देओस् ।

قَالُوْا وَجَدْنَآ اٰبَآءَنَا لَهَا عٰبِدِيْنَ ۝٥٣

(५३) उनीहरूले भने, हामीले आफ्ना पूर्वजहरूलाई यिनीहरूको पूजा गरिराखेको पाएका छौं ।[1]

قَالَ لَقَدْ كُنْتُمْ اَنْتُمْ وَاٰبَآؤُكُمْ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ۝٥٤

(५४) उहाँले भन्नुभयो त्यसपछि त तिमी र तिम्रा पूर्वज निश्चय खुल्ला विचलनमा थिए ।

قَالُوْٓا اَجِئْتَنَا بِالْحَقِّ اَمْ اَنْتَ مِنَ اللّٰعِبِيْنَ ۝٥٥

(५५) उनीहरूले भने कि के तपाईं वास्तवमा सत्य ल्याउनु भएछ अथवा यसै ठट्टा गरिराख्नु भएको छ ?[2]

قَالَ بَلْ رَّبُّكُمْ رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ الَّذِيْ فَطَرَهُنَّ ۖ وَاَنَا عَلٰى ذٰلِكُمْ مِّنَ الشّٰهِدِيْنَ ۝٥٦

(५६) उहाँले भन्नुभयो (होइन) बरु वास्तवमा तिम्रो पोषक आकाशहरू र धर्तीको पालनकर्ता हो, जसले उनीहरूलाई पैदा गरेको छ, र म त यसै कुराको साक्षी (र मान्दछु) हूँ ।[3]

وَتَاللّٰهِ لَاَكِيْدَنَّ اَصْنَامَكُمْ بَعْدَ اَنْ تُوَلُّوْا مُدْبِرِيْنَ ۝٥٧

(५७) र अल्लाहको सौगन्ध म तिम्रा मूर्तिहरूको उपचार अवश्य गर्नेछु जब तिमी पिठ्यूँ फर्काइ हिंडिदिनेछौ ।[4]

---

[1]जसरी आजपनि मूर्खता र मिथ्यावादमा फँसिएका मुसलमानहरूलाई विदअत (इस्लाम धर्ममा नयाँ कुरा सिर्जना गर्नु, जसको इस्लाम धर्मका नियमहरूसित कुनै सम्बन्ध वा प्रमाण प्राप्त छैन) र व्यर्थका परम्पराहरूबाट रोकिन्छ, त उत्तर दिन्छन् कि हामीले यिनलाई कसरी छाडिदियौं जबकि हाम्रा पूर्वजहरूलाई पनि यही गरिराखेको देखेका छौं । र यही उत्तर तिनीहरू पनि दिन्छन्, जो किताब एवं सुन्नतका आदेशहरूलाई छाडेर ज्ञानीहरू र उनीतिर सम्बन्धित फिक़ह (धर्मबोध) सित सम्बन्धित रहनलाई नै आवश्यक ठान्दछन् ।

[2]यो यसकारण भने कि उनीहरू यसभन्दा पहिला एक ईश्वरको उपासना (तौहीद) को विषयमा सुनेका थिएनन्, उनीहरूले ठाने कि शायद इब्राहीम हामीसँग मजाक (ठट्टा) त गरिराखेको छैन ।

[3]अर्थात् म उपहास गरिराखेको छैन, बरु यस्तो कुरो प्रस्तुत गरिराखेको छु, जसको ज्ञान एवं निश्चय (दर्शन) मलाई प्राप्त छ र त्यो यो हो कि तिम्रो प्रभु यी मूर्तिहरू होइनन्, बरु त्यो हो जो आकाशहरू र धर्तीको स्वामी र उनलाई सृष्टि गर्नेवाला छ ।

[4]यो आदरणीय इब्राहीमले आफ्नो हृदयमा निश्चित गरे, केही अन्यको भनाई छ कि विस्तारै भने, जसको तात्पर्य केही मानिसहरूलाई सुनाउनु थियो (अल्लाह राम्ररी जान्नेवाला छ) كَيْد

فَجَعَلَهُمْ جُذٰذًا اِلَّا كَبِيْرًا لَّهُمْ لَعَلَّهُمْ اِلَيْهِ يَرْجِعُوْنَ ﴿٥٨﴾

(५८) अत: उसले ती सबैलाई टुक्रा-टुक्रा गरिदियो, केवल ठूलो मूर्तिलाई छाडिदियो, यो पनि यसकारण ताकि उनीतिर फर्कून् ।[1]

قَالُوْا مَنْ فَعَلَ هٰذَا بِاٰلِهَتِنَآ اِنَّهٗ لَمِنَ الظّٰلِمِيْنَ ﴿٥٩﴾

(५९) उनीहरू भन्नथाले कि हाम्रा देवताहरूको यो दूरगति कसले गर्‍यो, यस्तो व्यक्ति अवश्य पापी हुनेछ ।[2]

قَالُوْا سَمِعْنَا فَتًى يَّذْكُرُهُمْ يُقَالُ لَهٗٓ اِبْرٰهِيْمُ ﴿٦٠﴾

(६०) भने कि हामीले एउटा नवयुवकलाई यिनका विषयमा कुरा गरिराखेका सुनेका थियौं, जसलाई इब्राहीम भनिन्छ ।[3]

قَالُوْا فَاْتُوْا بِهٖ عَلٰٓى اَعْيُنِ النَّاسِ لَعَلَّهُمْ يَشْهَدُوْنَ ﴿٦١﴾

(६१) उनीहरूले भने, त उसलाई सबैका आँखाका सामु ल्याउ ताकि सबैले देखून् ।[4]

قَالُوْٓا ءَاَنْتَ فَعَلْتَ هٰذَا بِاٰلِهَتِنَا يٰٓاِبْرٰهِيْمُ ﴿٦٢﴾

(६२) भन्नलागे, हे इब्राहीम ! के तिमीले नै हाम्रा देवताहरूको यो दूरगति बनाएका छौ ?[5]

---

(उपचार) को अर्थ यहाँ त्यो कर्म हो, जसद्वारा उनी जो मौखिक र भाषणका उपरान्त आफ्ना कर्महरूबाट क्रियान्वित गर्न चाहन्थ्यो, अर्थात मूर्तिहरूको तोडफोड ।

[1]अत: जुन दिन आफ्ना ईद अथवा कुनै पर्व मनाउनका लागि सारा जातिका मानिसहरू बाहिर गए र हजरत इब्राहीमले राम्रो मौका छोपी मूर्तिहरूको तोडफोड गरिहाले, मात्र एउटा ठूलो मूर्ति शेष राखे, केही ज्ञानी भन्दछन् कि उनले बन्चरो त्यो ठूलो मूर्तिको हातमा अल्भ्काइदिए, ताकि त्यस मूर्तिसँग सोधून् ।

[2]अर्थात् जव समारोहबाट फिर्ता भए, त देखे कि उनका देवताका मूर्तिहरू टुक्रा-टुक्रा भएका छन्, त भने कि यो कुनै महापापी व्यक्ति हो, जसले यो घोर कर्म गरेको छ ।

[3]उनीमध्ये केहीले भने कि त्यो नवयुवक इब्राहीम हो नि, त्यो हाम्रा मूर्तिहरूको विरोधमा बोल्दछ, यस्तो लाग्दछ कि यो उसैको काम हो ।

[4]अर्थात उसलाई दण्डित भएको हेरून्, ताकि पछि अरुको यो कामना गरोस् । अथवा यो अर्थ हो कि मानिसहरू यो कुराको साक्षी बनून् कि उनीहरूले इब्राहीमलाई मूर्तिहरू फुटालिराखेको देखून् वा ती मूर्तिहरूका विरोधमा कुरा गरिराखेको सुनेका छौं ।

(६३) उहाँले उत्तर दिनुभयो, बरु यो काम त उनका ठूला देवताले गरेका हुन्, तिमी आफ्ना देवताहरूसित सोध, यदि उनीहरू बोल्दछन् ।[1]

قَالَ بَلْ فَعَلَهُۥ كَبِيرُهُمْ هَٰذَا فَسْـَٔلُوهُمْ إِن كَانُوا۟ يَنطِقُونَ ﴿٦٣﴾

अर्थात् आदरणीय इब्राहीमलाई जनसमूहमा ल्याइयो र उनीसित सोधियो । आदरणीय इब्राहीमले जवाफ दिए कि यो काम त त्यस ठूलो मूर्तिको हो, यदि यी (फुटालिएका मूर्तिहरू) बोलेर भन्नसक्छन् भने अलि ती मूर्तिहरूसित त सोध । यी कुरा उनले उनको हाँसो उडाउन र मूर्खताको मजाकका लागि भनेका थिए, ताकि उनीहरू यो कुरा जानिहालून् कि, जो स्वयं बोल्न सक्दैनन्, र न कुनै कुराको पहिलेदेखि ज्ञान राख्दछ, त्यो ईश्वर हुनसक्दैन, र न त्यसलाई पूज्य भन्नु उचित छ । एउटा सहीह हदीसमा आदरणीय इब्राहीमको यस कथन بل فعله كبيرهم लाई मिथ्या कथन भनिएको छ कि आदरणीय इब्राहीमले तीनवटा झूठ बोले, दुईटा अल्लाहका लागि, एउटा إني سقيم (म बिरामी छु) र दोस्रो यही र तेस्रो आदरणीय सारह आफ्नी पत्नीलाई बहिनी भन्नु । (सहीह बुखारी अध्याय अंबिया) वर्तमान युगका केही व्याख्याकारहरूले यस हदीसलाई कुर्आनका विरूद्ध मानेर यसलाई इन्कार गरेका छन्, र यसलाई सही मान्नु अतिश्योक्ति र हदीसमाथि अन्धविश्वास भनेका छन् । परन्तु उनको यो विचार उचित छैन । निःसन्देह वास्तविकताको आधारमा उनलाई मित्थ्या भन्न सकिंदैन, तर प्रत्यक्ष रूपले उनलाई झूठबाट अलग पनि गर्न सकिन्न । यद्यपि यी झूठ अल्लाहकहाँ पकड योग्य छैनन्, किनभने त्यो अल्लाहका लागि भनियो, जबकि कुनै पाप कर्म अल्लाहका लागि हुनसक्दैन र यो त्यतिखेर नै हुनसक्छ जब प्रत्यक्षरुपले झूठो हुँदाहुँदै पनि यो वास्तवमा झूठो नहोस् जस्तै आदरणीय आदमको विषयमा غوى तथा عصى (अवज्ञाका) (विपथ भईहाले) का शब्द प्रयोग गरिएको छ । जबकि कुर्आन स्वयं यसलाई अर्थात वृक्षबाट खानुलाई भूल तथा निश्चयको कमीको परिणाम भनिन्छ, जसबाट प्रत्यक्ष रूपले सिद्ध छ कि कामका दुई पक्ष हुन्छन् । एक पक्षले त्यो राम्रो तथा प्रत्यक्ष रूपले नराम्रो हुन्छ, अतः इब्राहीमको यो कथन प्रत्यक्ष रुपले झूठो नै छ यसकारण कि यथार्थताको विपरीत थियो तथा मूर्तिहरूलाई उनले स्वयं तोडे किन्तु यसलाई ठूलो मूर्तिसित सम्बन्धित गरे, तर उनको लक्ष्य अर्कोतिर संकेत गर्नु तथा एकेश्वरवादलाई प्रमाणित गर्नु थियो यसकारण हामी झूठोको ठाउँतर्फ दिने तथा मूर्तिपूजकहरूको मूर्खतालाई सिद्ध गर्नुको एउटा रुप ठान्नेछौं यसबाहेक यी तीनवटा झूठको चर्चा जुन सन्दर्भमा आएको छ त्यो पनि विचारणीय छ र त्यो हो अल्लाहका सामु सिफारिशका लागि महशरमा जानुबाट तर्कनु कि संसारमा उनीबाट तीन अवसरहरूमा चूक भएको छ जबकि त्यो चूक होइन किन्तु उनी अल्लाहका प्रतापबाट यति भयभीत हुनेछन् कि यी कुराहरू झूठसँग प्रत्यक्ष समानताका कारण पकडको योग्य देखिने छ अतः हदीसमा उद्देश्य

فَرَجَعُوٓا۟ إِلَىٰٓ أَنفُسِهِمْ فَقَالُوٓا۟ إِنَّكُمْ أَنتُمُ ٱلظَّٰلِمُونَ ﴿٦٤﴾

(६४) अत: उनीहरुले आफ्नो मनमा ठाने र (मनै-मनमा) भन्नलागे कि वास्तवमा तिमी स्वयं पापी हौ ।[1]

ثُمَّ نُكِسُوا۟ عَلَىٰ رُءُوسِهِمْ لَقَدْ عَلِمْتَ مَا هَٰٓؤُلَآءِ يَنطِقُونَ ﴿٦٥﴾

(६५) अनि टाउका निहुराइ (केही सोच-विचार गरी, यद्यपि उनी स्वीकार गरिसकेका थिए तैपनि उनीहरूले भने) कि यो तिमी जान्दछौ कि यिनी बोल्दैनन् ।[2]

قَالَ أَفَتَعْبُدُونَ مِن دُونِ ٱللَّهِ مَا لَا يَنفَعُكُمْ شَيْـًٔا وَلَا يَضُرُّكُمْ ﴿٦٦﴾

(६६) (इब्राहीमले) त्यसै समय भने हाय ! के तिमी उनको पूजा गर्दछौ, जो तिमीलाई न कोही लाभ पुऱ्याउन सक्छन् र न हानि ।

أُفٍّ لَّكُمْ وَلِمَا تَعْبُدُونَ مِن دُونِ ٱللَّهِ ۖ أَفَلَا تَعْقِلُونَ ﴿٦٧﴾

(६७) धिक्कार छ तिमीमाथि र उनीमाथि जसको तिमी अल्लाह बाहेक पूजा गर्दछौ । के तिमीलाई यति बुद्धि छैन ?[3]

---

इब्राहीमलाई झूठो बनाउनु कदापि होइन बरु त्यस स्थितिलाई देखाउनु हो जुन प्रलयका दिन भयका कारण उनीमाथि आक्षादित हुनेछ ।

[1]आदरणीय इब्राहीमको यस उत्तरलाई सुनेर उनीहरू चिन्तामा परिहाले र एक-अर्कालाई उत्तरहीन भएर भन्नथाले, वास्तवमा पापी त तिमी नै हौ, जो आफ्नो ज्यान बचाउन सक्दैन र क्षति पुऱ्याउनेवाला हात समात्ने शक्ति राख्दैन, त्यो पूजाका योग्य कसरी हुनसक्छ ? केहीले भने कि देवताको बिल्कुलै रक्षाको प्रबन्ध नगर्नमा एक-अर्कालाई नराम्रो भने र रक्षाहीन छाड्नुमा एक-अर्कालाई पापी भने ।

[2]अनि हे इब्राहीम ! तिमी हामीसित किन यो भनिराखेका छौ कि यिनीसित सोध के यिनी बोल्न सक्दछन् ? जबकि तिमी राम्ररी जान्दछौ कि यिनी बोल्ने शक्ति राख्दैनन् ।

[3]अर्थात् जब उनीहरू स्वयं उनका विवशतालाई मान्न बाध्य भइहाले त फेरि उनको मूर्खतामाथि अफसोच गर्दै भने कि अल्लाहलाई छाडेर यस्ता शक्तिहीन र निसहायको तिमी पूजा गर्दछौ ?

قَالُوا حَرِّقُوهُ وَانْصُرُوٓا اٰلِهَتَكُمْ اِنْ كُنْتُمْ فٰعِلِيْنَ ﴿٦٨﴾

(६८) उनीहरूले भने कि यसलाई आगोमा पोलिदेउ र आफ्ना देवताहरूको रक्षा गर, यदि तिमीहरूले केही गर्नुछ भने ।[1]

قُلْنَا يٰنَارُ كُوْنِيْ بَرْدًا وَّسَلٰمًا عَلٰٓى اِبْرٰهِيْمَ ﴿٦٩﴾

(६९) हामीले भन्यौं, हे आगो ! तिमी चिसो भईहाल र इब्राहीमको लागि सलामती [(शान्ति) र सुखदायी] बन ।

وَاَرَادُوْا بِهٖ كَيْدًا فَجَعَلْنٰهُمُ الْاَخْسَرِيْنَ ﴿٧٠﴾

(७०) यद्यपि उनीहरूले त्यस (इब्राहीम) को अहित चाहयो, परन्तु हामीले उनीहरूलाई हानिग्रस्त (असफल) गरिदियौं ।

وَنَجَّيْنٰهُ وَلُوْطًا اِلَى الْاَرْضِ الَّتِيْ بٰرَكْنَا فِيْهَا لِلْعٰلَمِيْنَ ﴿٧١﴾

(७१) र हामीले (इब्राहीम) र लूतलाई बचाएर त्यस भूमितिर लग्यौं, जसमा हामीले समस्त जगतका लागि विभूतिहरू राखेका थियौं ।[2]

[1]आदरणीय इब्राहीमले जब आफ्नो तर्क प्रस्तुत गरे र उनको कुमार्ग (गुमराही) र मूर्खतालाई यसप्रकारले व्यक्त गरे कि उनीहरूसँग कुनै उत्तर रहेन किनकि उनी सन्मार्ग विहीन थिए र कुफ्र एवं शिर्कले उनका हृदयमा अन्धकार गरिदिएको थियो । यसकारण शिर्क छोडिनुको सट्टा उल्टै आदरणीय इब्राहीमका विरोधमा झन् कडा भइहाले । र आफ्ना देवताहरूको दुहाइ दिएर उनलाई आगोमा हाल्न तयारी गर्नथाले । अतः उनीहरूले आगोको एउटा ठूलो थुप्रो तयार गरे, र भनिन्छ कि आदरणीय इब्राहीमलाई डोल (डोको जस्तै) मा राखेर फँयाकिदिए, र अल्लाह तआलाले आगोलाई आदेश दियो कि इब्राहीमका लागि तिमी यति शीतल भइदेउ कि उसलाई कष्ट नहोस् । ज्ञानीहरूको कथन छ कि यदि अल्लाह तआलाले शीतलको साथमा सलामत (शान्ति) शब्द नभनेको भए इब्राहीमको लागि त्यसको चिसोपना कष्टदायक एवं असहनीय हुन्थ्यो । जे होस् यो एउटा ठूलो चमत्कार हो, जुन आगोको ज्वाला फुलहरूको कोमल ओछ्यानको रुपमा आदरणीय इब्राहीमका लागि अल्लाह तआलाको आदेशले प्रदर्शित भयो । यसप्रकार अल्लाह तआलाले आफ्नो उपासकलाई त्यसका शत्रुहरूको चालबाट सुरक्षित गरिहाल्यो ।

[2]यसबाट तात्पर्य धेरैजसो टीकाकारले सीरिया देश लिएका छन्, जसको हरियाली, फल तथा नहरहरूको अधिकता र नबीहरूको निवास स्थल हुनुका कारण मंगलमय (बरकत) भनिएको छ ।

وَوَهَبْنَا لَهُۥٓ إِسْحَٰقَ وَيَعْقُوبَ نَافِلَةً ۖ وَكُلًّا جَعَلْنَا صَٰلِحِينَ ﴿٧٢﴾

(७२) र हामीले उसलाई इसहाक प्रदान गर्‍यौं, र त्यसमाथि अधिक याकूब, तथा प्रत्येकलाई सत्कर्मी बनायौं ।[1]

وَجَعَلْنَٰهُمْ أَئِمَّةً يَهْدُونَ بِأَمْرِنَا وَأَوْحَيْنَآ إِلَيْهِمْ فِعْلَ ٱلْخَيْرَٰتِ وَإِقَامَ ٱلصَّلَوٰةِ وَإِيتَآءَ ٱلزَّكَوٰةِ ۖ وَكَانُوا۟ لَنَا عَٰبِدِينَ ﴿٧٣﴾

(७३) र हामीले उनीहरूलाई प्रमुख बनाइदियौं ताकि हाम्रा आदेशले मानिसहरूको मार्गदर्शन गरून् र हामीले उनीतिर सत्कर्महरू गर्न र नमाज़ स्थापित गर्न र ज़कात दिनका लागि प्रकाशना (वह्य) गर्‍यौं र उनी सबै हाम्रा उपासक थिए ।

وَلُوطًا ءَاتَيْنَٰهُ حُكْمًا وَعِلْمًا وَنَجَّيْنَٰهُ مِنَ ٱلْقَرْيَةِ ٱلَّتِى كَانَت تَّعْمَلُ ٱلْخَبَٰٓئِثَ ۗ إِنَّهُمْ كَانُوا۟ قَوْمَ سَوْءٍ فَٰسِقِينَ ﴿٧٤﴾

(७४) र हामीले लूतलाई पनि विद्वता तथा ज्ञान प्रदान गर्‍यौं र उसलाई त्यस वस्तीबाट मुक्त गर्‍यौं जहाँका मानिसहरू नराम्रा कर्महरूमा लिप्त थिए, र वास्तवमा उनीहरू महापापी थिए ।

وَأَدْخَلْنَٰهُ فِى رَحْمَتِنَآ ۖ إِنَّهُۥ مِنَ ٱلصَّٰلِحِينَ ﴿٧٥﴾

(७५) र हामीले उसलाई (लूतलाई) आफ्नो कृपामा सम्मिलित गरिहाले । निःसन्देह त्यो सत्कर्मीहरू मध्येबाट थियो ।[2]



---

[1] نافلة अधिकलाई भन्दछन् । आदरणीय इब्राहीमले त केवल पुत्रको कामना गरेका थिए, उनको कामनाको अतिरिक्त पौत्र पनि प्रदान गर्‍यो ।

[2] आदरणीय लूत आदरणीय इब्राहीमका भाइका पुत्र (भतिजा) थिए, र आदरणीय इब्राहीममाथि ईमान ल्याएका थिए र उनीसँग इराकबाट यात्रा गरी सीरिया जानेवालाहरू मध्येबाट थिए । अल्लाहले उनलाई पनि ज्ञान एवं तत्वज्ञान अर्थात नबूअत प्रदान गरेको थियो । उनी जुन क्षेत्रका लागि नबी बनाएर पठाइएका थिए, त्यसलाई अमूरः र सदूम भनिन्छ । यो फिलिस्तीनको मृत सागरसित जोडिएको एउटा भाग हो । उनका जातिवाला गुदा मैथुन जस्ता कुकर्म, मार्गहरूमा बसेर बटुवाहरूमाथि व्यङ्ग्य गर्ने र हैरान गर्ने, ढुङ्गा हान्ने कुरोमा कुख्यात थिए, जसलाई अल्लाह तआ़लाले कुकर्म (ख़बाएस) भनेको छ । अन्ततः आदरणीय लूत तथा उसका अनुयायीहरूलाई आफ्नो कृपामा प्रवेशित गरेर अर्थात् उनलाई बचाएर समुदायको सत्यनाश गरिदियो ।

وَ نُوۡحًا اِذۡ نَادٰی مِنۡ قَبۡلُ فَاسۡتَجَبۡنَا لَهٗ فَنَجَّیۡنٰهُ وَ اَهۡلَهٗ مِنَ الۡكَرۡبِ الۡعَظِیۡمِ ﴿۷۶﴾

(७६) र नूहको त्यस समयलाई (याद गर) जब उनले यसभन्दा पहिला दुआ (विनय) गऱ्यो, हामीले उसलाई र उसको परिवारलाई ठूलो पीडाबाट मुक्त गरिदियौं ।

وَ نَصَرۡنٰهُ مِنَ الۡقَوۡمِ الَّذِیۡنَ كَذَّبُوۡا بِاٰیٰتِنَا ؕ اِنَّهُمۡ كَانُوۡا قَوۡمَ سَوۡءٍ فَاَغۡرَقۡنٰهُمۡ اَجۡمَعِیۡنَ ﴿۷۷﴾

(७७) र त्यस जातिको दाँजो (मुकाबिला) मा त्यसको सहायता गऱ्यो जसले हाम्रा आयतलाई झुठ्लाएका थिए । वास्तवमा तिनीहरू नराम्रा मानिस थिए, तसर्थ हामीले ती सबैलाई डुबाइदियौं ।

وَ دَاوٗدَ وَ سُلَیۡمٰنَ اِذۡ یَحۡكُمٰنِ فِی الۡحَرۡثِ اِذۡ نَفَشَتۡ فِیۡهِ غَنَمُ الۡقَوۡمِ ۚ وَ كُنَّا لِحُكۡمِهِمۡ شٰهِدِیۡنَ ﴿۷۸﴾

(७८) र दाऊद एवं सुलैमानलाई (याद गर्नुस्) जबकि उनी खेतका विषयमा फैसला (निर्णय) गरिराखेका थिए कि केही मानिसका बाखाहरू रात्रिमा त्यसबाट चरिहालेका थिए र उनका फैसला (निर्णय) मा हामी विद्यमान थियौं ।

فَفَهَّمۡنٰهَا سُلَیۡمٰنَ ۚ وَ كُلًّا اٰتَیۡنَا

(७९) हामीले त्यसको उचित फैसला सुलैमानलाई बुझाइदियौं ।[1] अवश्य हामीले प्रत्येकलाई

[1]टीकाकारहरूले यो कथा यसप्रकार वर्णित गरेका छन् कि एक व्यक्तिका बाखाहरू राति अर्को व्यक्तिका खेतमा गएका छन् र खेत चरेका छन् । आदरणीय दाऊद जो पैगम्बर (ईशदूत) का साथसाथै राज्यअधिकारी पनि थिए, उनले निर्णय दिए कि बाखाहरूलाई खेतवालाले लिइहालोस्, ताकि त्यसको क्षतिपूर्ति हुनसकोस् । आदरणीय सुलैमानले यस न्यायको विरोध गरे र फैसला गरे कि केही समयका लागि बाखाहरू खेतका मालिकलाई दिइयून् ताकि यिनीबाट लाभ उठाओस्, र खेती बाखावालालाई दिइयोस् ताकि त्यो खेतहरूको सिंचाइ र हेरचाह गरी त्यसलाई सुधारोस्, जब त्यो खेत त्यस दशामा आउँछ, जुन बाखाहरूले चर्नुभन्दा पहिला थियो, त खेत, खेतको मालिकलाई र बाखाहरू, बाखाका मलिकलाई फिर्ता गरियून् । पहिलो न्यायको तुलनामा दोस्रो फैसला यस दृष्टिले उचित थियो कि कसैलाई आफ्नो कुराबाट बञ्चित हुन नपरोस्, जबकि पहिलो फैसलामा बाखावालालाई बाखाहरूबाट बञ्चित हुनु परेको थियो । तैपनि अल्लाहले आदरणीय दाऊदको प्रशंसा गऱ्यो कि हामीले प्रत्येकलाई (अर्थात् दाऊद र सुलैमानलाई) ज्ञान एवं विवेक प्रदान गरेका थियौं । यस कथाबाट केही मानिसहरू यो तर्क दिन्छन् कि प्रत्येक मुजतहिद उचित न्याय गर्नेवाला हुन्छ ।

حُكْمًا وَّعِلْمًا وَّسَخَّرْنَا مَعَ دَاوٗدَ الْجِبَالَ يُسَبِّحْنَ وَالطَّيْرَ ۭ وَكُنَّا فٰعِلِيْنَ ⑦٩

हिकमत (विद्वता) र ज्ञान दिएका थियौं, र दाऊदका अधीन हामीले पर्वतलाई गरिदिएका थियौं, जो महिमा (तस्बीह) गर्दथे,[1] र पंक्षीहरूलाई पनि ।[2] यस्तो हामी गर्नेवाला नै थियौं ।[3]

وَعَلَّمْنٰهُ صَنْعَةَ لَبُوْسٍ لَّكُمْ لِتُحْصِنَكُمْ مِّنْۢ بَاْسِكُمْ ۚ فَهَلْ اَنْتُمْ شٰكِرُوْنَ ⑧٠

(८०) र हामीले उसलाई तिम्रा निम्ति वस्त्र (कवच) बनाउन सिकायौं, ताकि युद्ध (को हानि) बाट तिम्रो बचाव गर्न सकोस् ।[4] अनि के तिमी अहिलेपनि कृतज्ञता व्यक्त गर्नेछौ ?

इमाम शौकानी यस तर्कलाई उचित मान्दैनन् । कुनै एउटै मामिलामा दुईटा अलग-अलग (विपरीत) न्याय गर्नेवाला दुई न्यायधीश, एउटै समयमा उचित न्याय गर्नेवाला (मुसीब) हुन सक्दैनन्, उनीमध्येबाट अवश्य एउटा (मुसीब) उचित न्याय गर्नेवाला र दोस्रो अनुचित न्याय गर्नेवाला (मुख्ती) हुनेछ । यद्यपि यो वेग्लै कुरो हो कि न्यायधीश जसको न्याय अनुचित छ अल्लाहको दृष्टिमा पापी हुनेछैन, उसलाई एउटा पुण्य प्राप्त हुनेछ । हेर्नुहोस् : (फ़तहुल क़दीर)

[1]यसको अर्थ कदापि यो होइन कि पर्वत उनका तस्वीह (प्रशंसामान) को ध्वनिले गुञ्जयमान हुन्थे (किनभने यसमा कुनै चमत्कारको कुरै बाँकी रहँदैन) प्रत्येक सानो-ठूलो को उच्च आवाजबाट गुंज उत्पन्न हुनसक्छ (प्रतिध्वनिको रूपमा) । बरु अर्थ आदरणीय दाऊद सँगसँगै पर्वतहरूबाट पनि तस्बीह पढ्नु । यो भन्ने कुरो थिएन वास्तवमा थियो ।

[2]पंक्षी पनि दाऊदका करुणाले भरिएको आवाजलाई सुनेर अल्लाहको पवित्रताको वर्णन गर्दथे अथवा पंक्षी पनि उनका अधीन गरिएका थिए ।

[3]अर्थात् यो बुझाउनु, निर्णयको ज्ञान दिनु तथा अधीन गर्नु हाम्रो काम थियो । अतः यसमाथि कसैलाई आश्चर्य हुनु हुँदैन न इन्कार गर्नुहुन्छ । यसकारण कि हामी जे चाहन्छौ गर्न सक्दछौं ।

[4]अर्थात् हामीले दाऊदका लागि फलामलाई कोमल बनाइदिएका थियौं जसबाट त्यो उनीहरू लडाईंको लागि वस्त्र तथा कवचहरू बनाउँथे जुन रणक्षेत्रमा तिम्रा सुरक्षाका साधनहरू हुन् । नबीका सहचर कतादहको भनाई छ कि ईशदूत दाऊद भन्दा पहिला पनि कवचहरू बन्दथे किन्तु उनी हुन्थे उनमा कडीहरू हुँदैनथे । ईशदूत दाऊद प्रथम पुरुष हुन्, जसले कडी र कुण्डा भएका कवच तयार गरे । (इब्ने क़सीर)

وَلِسُلَيْمٰنَ الرِّيْحَ عَاصِفَةً تَجْرِىْ بِاَمْرِهٖۤ اِلَى الْاَرْضِ الَّتِىْ بٰرَكْنَا فِيْهَا ؕ وَكُنَّا بِكُلِّ شَىْءٍ عٰلِمِيْنَ ﴿٨١﴾

(८१) र हामीले सुलैमानका आधीन तीव्र प्रचण्ड वायुलाई गरिदियौं[1] जुन त्यसका आदेशमा धर्तीका त्यतातिर चल्थे, जसमा हामीले विभूतिहरू राखेका थियौं । र हामी सर्वज्ञ छौं ।

وَمِنَ الشَّيٰطِيْنِ مَنْ يَّغُوْصُوْنَ لَهٗ وَيَعْمَلُوْنَ عَمَلًا دُوْنَ ذٰلِكَ ۚ وَكُنَّا لَهُمْ حٰفِظِيْنَ ﴿٨٢﴾

(८२) र (यसैप्रकार) (धेरैजसो शैतानहरूलाई पनि) (त्यसको अधिनस्त बनाएका थियौं,) जुन त्यसका आदेशमा डुबुल्की लगाउँथे र यसका अतिरिक्त धेरै काम गर्दछ ।[2] र तिनका रक्षा गर्नेवाला हामी नै थियौं ।[3]

وَاَيُّوْبَ اِذْ نَادٰى رَبَّهٗۤ اَنِّىْ مَسَّنِىَ الضُّرُّ وَاَنْتَ اَرْحَمُ الرّٰحِمِيْنَ ﴿٨٣﴾

(८३) र अय्यूब (को त्यस स्थितिलाई याद गर) जबकि उसले आफ्नो रबलाई पुकाऱ्यो कि मलाई यो रोग लागेको छ र तिमी सबै दयावानहरूमध्ये अधिक दयानिधि छौ ।

فَاسْتَجَبْنَا لَهٗ فَكَشَفْنَا مَا بِهٖ مِنْ ضُرٍّ وَّاٰتَيْنٰهُ اَهْلَهٗ وَمِثْلَهُمْ

(८४) तब हामीले उसको (गुहार) सुन्यौं र जुन दुख उनलाई थियो, त्यसलाई समाप्त गरिदियौं र उसलाई त्यसको परिवार प्रदान गऱ्यौं, बरु त्यसलाई आफ्नो

[1]जसरी पर्वत र पंक्षी आदरणीय दाऊदका अधीन गरिदिएका थियौं, त्यसैप्रकार वायु आदरणीय सुलैमानका अधीन गरेका थियौं । उनी आफ्नो राज्यका अधिकारीहरूसमेत तख्त (सिंहासन) मा आसीन हुन्थे र जहाँ चाहन्थे महिनौंको यात्रा क्षण एवं पलहरूमा पूरा गरी त्यहाँ पुग्दथे, हावाले उनको तख्तलाई उडाएर लैजान्थे । उव्जाउ धर्तीको अर्थ सीरियाको क्षेत्र हो ।

[2]जिन्नात पनि आदरणीय सुलैमानका अधीन थिए, जो उनका आदेशले समुद्रमा डुबुल्की लगाउँथे र उनका लागि मोती-मणि इत्यादि निकाल्दथे, यसैप्रकार अन्य कार्य जुन उहाँले चाहनुहुन्थ्यो गर्नुहुन्थ्यो ।

[3]अर्थात् जिन्नहरूमा जो उद्दण्डता तथा आतङ्कको मिश्रण, त्यसबाट हामीले सुलैमानको रक्षा गऱ्यौं र उनीहरू उनका सामु टाउको उचाल्न सक्दैनथे ।

مَّعَهُمْ رَحْمَةً مِّنْ عِندِنَا وَذِكْرَىٰ لِلْعَٰبِدِينَ ﴿٨٤﴾

विशेष कृपाले[1] उनका साथ त्यसतै अरु दियौं, ताकि उपासकहरूका लागि शिक्षाप्रद (स्मरणीय) होस् ।

وَإِسْمَٰعِيلَ وَإِدْرِيسَ وَذَا ٱلْكِفْلِ ۖ كُلٌّ مِّنَ ٱلصَّٰبِرِينَ ﴿٨٥﴾

(८५) र इस्माईल र इदरीस, र जुलकिफ्ल[2] यी सबै धैर्यवान थिए ।

وَأَدْخَلْنَٰهُمْ فِى رَحْمَتِنَآ ۖ إِنَّهُم مِّنَ ٱلصَّٰلِحِينَ ﴿٨٦﴾

(८६) हामीले उनीहरूलाई आफ्नो दया (अनुकम्पा) मा प्रवेश दियौं । यी सबै पुनीत मानिस थिए ।

وَذَا ٱلنُّونِ إِذ ذَّهَبَ مُغَٰضِبًا

(८७) तथा माछावाला[3] (यूनुस् अलैहिस्सलाम) लाई (याद गर) ! जब त्यो क्रोधित भइ

[1]कुर्आन मजीदमा आदरणीय अय्यूबलाई धैर्यवान भनिएको छ । (सूर: साद) यसको अर्थ यो हो कि उनको परीक्षा लिइयो, जसमा उनीहरूले कृतज्ञता र धैर्य (सब्र र शुक्र) लाई छाडेनन् । ती परीक्षाहरू र कष्ट के थिए यसको कुनै प्रमाणित वर्णन पाइँदैन । तैपनि कुर्आनका वर्णन अनुसार प्रतीत हुन्छ कि अल्लाह तआलाले उनलाई धन-धान्य र पुत्र प्रदान गरेको थियो, परीक्षाका लागि अल्लाह तआलाले यो पनि खोसिहालेको थियो, यहाँसम्मकि शारीरिक शक्ति पनि क्षीण गरिदिएको थियो, अत: रोगहरूबाट पीडित थिए । अन्तत: भनिन्छ कि १८ वर्षको परीक्षा पश्चात प्रभुका समक्ष स्वीकार गरे र स्वास्थ्यका साथ-साथै धन-धान्य र पुत्र पहिलाभन्दा दुईगुना प्रदान गर्‍यो । यसको केही वर्णन सहीह इब्ने हिब्बानको एक कथनमा पाईन्छ (भाग ४, पृष्ठ २४४, मजमउज्जवाएद ८/२०८) कुनै प्रकारको गुनासो र रूनु, विलाप गर्नु सब्र (धैर्य) को विपरीत छ, जसको प्रदर्शन आदरणीय अय्यूबले गरेनन्, र प्रार्थना सब्रको विपरीत छैन, यसैकारण अल्लाह तआलाले त्यसको लागि (प्रार्थनाको लागि) "हामीले स्वीकार गर्‍यौं" को शब्द प्रयोग गरेको छ ।

[2]जुलकिफ्लको विषयमा मतभेद छ कि उनी नबी थिए वा थिएनन् ? केही उनको नबूअत र केही विलायतका पक्षमा छन् । इमाम इब्ने जरीर यिनका विषयमा मौन छन्, इमाम इब्ने कसीर भन्नुहुन्छ :"कुर्आनमा नबीहरूसँगै उनको पनि वर्णन उनी नबी हुने कुरो व्यक्त गर्दछन् ।" अल्लाह राम्ररी जान्दछ ।

[3]मछलीवालासित तात्पर्य आदरणीय यूनुस हुन्, जो आफ्ना कौमसित क्रोधित भई अल्लाहका प्रकोपको धम्की दिएर अल्लाहका आदेशबिना त्यहाँबाट हिंडिदिएका थिए, जसका कारण अल्लाह तआलाले समात्यो र उनलाई माछाको भोजन (गाँस) बनाइदियो, यसको केही वर्णन सूर: यूनुसमा भइसकेको छ र केही सूर: *साफ्फात* मा आउनेछ ।

فَظَنَّ اَنْ لَّنْ نَّقْدِرَ عَلَيْهِ فَنَادٰى فِى الظُّلُمٰتِ اَنْ لَّآ اِلٰهَ اِلَّآ اَنْتَ سُبْحٰنَكَ ۖ اِنِّىْ كُنْتُ مِنَ الظّٰلِمِيْنَ ۝٨٧

हिंडिदियो र ठान्यो कि हामी उसलाई समात्ने छैनौं । अन्ततः उसले अँध्याराहरू[१] बाट पुकाऱ्यो कि तपाईं अतिरिक्त कोही पूजनीय छैन, तपाईं पवित्र हुनुहुन्छ । निःसन्देह म नै अत्याचारीहरू मध्येबाट हूँ ।

فَاسْتَجَبْنَا لَهٗ ۙ وَنَجَّيْنٰهُ مِنَ الْغَمِّ ؕ وَكَذٰلِكَ نُـْۨجِى الْمُؤْمِنِيْنَ ۝٨٨

(८८) तब हामीले उसको गुहार सुन्यौं र उसलाई दुखहरूबाट मुक्त गऱ्यौं । र हामी यसैप्रकार ईमानवालाहरूलाई बचाउने गर्दछौं ।[२]

وَزَكَرِيَّآ اِذْ نَادٰى رَبَّهٗ رَبِّ لَا تَذَرْنِىْ فَرْدًا وَّاَنْتَ خَيْرُ الْوٰرِثِيْنَ ۝٨٩

(८९) र ज़करीयालाई (स्मरण गर) जब उसले आफ्नो प्रभुसित प्रार्थना गऱ्यो कि हे मेरा प्रभु ! मलाई एक्लै नछाड, तिमी सबैभन्दा राम्रो उत्तराधिकारी हौ ।

فَاسْتَجَبْنَا لَهٗ ۡ وَوَهَبْنَا لَهٗ يَحْيٰى وَاَصْلَحْنَا لَهٗ زَوْجَهٗ ؕ اِنَّهُمْ كَانُوْا يُسٰرِعُوْنَ فِى الْخَيْرٰتِ

(९०) त हामीले उसको प्रार्थना अङ्गिकार गऱ्यौं र उसलाई यहया प्रदान गऱ्यौं ।[३] र उनकी पत्नीलाई उनका लागि सुधार दियौं ।[४] यी पुनीत मानिस सत्कर्महरूतिर शीघ्र दगुरथे, र

---

[१] ظُلْمَةٌ ظُلُمَات को बहुवचन हो, यसको अर्थ अँध्यारो हुन्छ । आदरणीय यूनुस अँध्यारोमा घेरिएका थिए । रातिको अँध्यारो, समुद्रको अँध्यारो र माछाको पेटको अँध्यारो ।

[२] हामीले यूनुसको प्रार्थना स्वीकार गऱ्यौं र अँध्यारो र माछाको पेटबाट छुटकारा दियौं । जो पनि मोमिन हामीलाई यसप्रकारका कष्ट र दुखहरूमा पुकार्नेछ हामीले त्यसलाई छुटकारा दिनेछौं । हदीसमा पनि वर्णित छ, नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : "जुन मुसलमानले पनि यस दुआका साथ कुनै पनि विषयको लागि दुआ माँगे त अल्लाहले त्यसलाई स्वीकार गऱ्यो ।" (जामे तिर्मिजी संख्या ३५०५ तथा हदीसका विशेषज्ञ अल्बानीले यसलाई सही भन्नुभएको छ)

[३] आदरणीय ज़करीयाले बूढेसमा पुत्रका लागि दुआ (प्रार्थना) गर्नु त अल्लाहतिरबाट प्रदान गरिनु, त्यसको आवश्यक वर्णन सूरः आले इमरान र सूरः ताहामा भइसकेको छ । यहाँपनि यसतिर इशारा (संकेत) यी शब्दहरूमा गरिएको छ अर्थात तिनी बाँझो तथा कुनै बच्चालाई जन्मदिनुको योग्य थिइनन्, हामीले तिनको यस दोषलाई समाप्त गरी तिनलाई एउटा नेक (राम्रो आचरण भएको) पुत्र प्रदान गऱ्यौं ।

وَيَدْعُونَنَا رَغَبًا وَّرَهَبًا ۖ وَكَانُوا لَنَا خٰشِعِيْنَ ﴿٩٠﴾

हामीलाई मोह र भयका साथ पुकार्दथे, र हाम्रा सामु विनम्र रहन्थे ।[1]

وَالَّتِيْٓ اَحْصَنَتْ فَرْجَهَا فَنَفَخْنَا فِيْهَا مِنْ رُّوْحِنَا وَجَعَلْنٰهَا وَابْنَهَآ اٰيَةً لِّلْعٰلَمِيْنَ ﴿٩١﴾

(९१) र त्यो (सती महिला) जसले आफ्नो सतीत्वको रक्षा गऱ्यो, हामीले त्यसमा आत्मा फुक्यौं र स्वयं उसलाई र उसको पुत्रलाई सम्पूर्ण जगत्‌का निम्ति निशानी (लक्षण) बनाइदियौं ।[2]

اِنَّ هٰذِهٖٓ اُمَّتُكُمْ اُمَّةً وَّاحِدَةً ۖ وَّاَنَا رَبُّكُمْ فَاعْبُدُوْنِ ﴿٩٢﴾

(९२) यो तिम्रो गिरोह (समूह) हो जुन वास्तवमा एउटै गिरोह हो, र म तिमी सबैको प्रभु हूँ। अत: तिमी सबै मेरै इबादत (उपासना) गर ।[3]

وَتَقَطَّعُوْٓا اَمْرَهُمْ بَيْنَهُمْ ۗ كُلٌّ اِلَيْنَا رٰجِعُوْنَ ﴿٩٣﴾

(९३) परन्तु मनिसहरूले परस्पर आफ्ना धर्म गुट बनाइहाले । सबै हामीतिर फर्कि आउनुपर्नेछ ।[4]

[1]अर्थात् प्रार्थना स्वीकार हुनका लागि यो आवश्यक छ कि ती कुराहरूलाई ध्यानमा विशेषरुपले राख्नुपर्दछ जसको वर्णन यहाँ विशेषरुपले गरिएको छ । उदाहरणस्वरूप रूनु, विलाप गर्नुका साथ अल्लाहका सामु दुआ (प्रार्थना) र मुनाज़ात (विनय), असल कर्महरूमा अगाडी बढाउनु, डर र मोहका भावका साथ प्रभुलाई गुहार्नु र त्यसका सामु विशेषत: विनम्रता तथा विनयको भावले ध्यानमँग्न हुनु ।

[2]यो आदरणीय मरियम र आदरणीय ईसाको वर्णन हो, जुन पहिला चर्चित भइसकेको छ ।

[3]उम्म (गिरोह) को भावार्थ यहाँ धर्म अथवा धार्मिक समुदाय हो, अर्थात् तिम्रो धर्म र गिरोह एउटै हो र त्यो धर्म तौहीदको धर्म हो, जसको आमन्त्रण सबै नबीहरूले दिए र गिरोह, इस्लामको गिरोह हो जुन सबै नबीहरूको गिरोह रहिआएको छ । जस्तो कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो: "हामी नबीहरूको समूह अल्लाती सन्तान (जसका पिता एक र माताहरू कैयन् हुन्छन्) हौं, हाम्रो धर्म एउटै छ ।" (इब्ने क़सीर)

[4]अर्थात तौहीद (अद्वैत) र प्रभुका इबादत (उपासना) छाडेर कैयन् समुदाय र गिरोहहरूमा विभाजित भए । एउटा गिरोह मुश्रिकहरू (मूर्तिपूजक आदि) र काफ़िरहरूको भयो । र नबी र रसूलहरूलाई मान्नेवाला पनि पुस्ताहरू बने, कोही यहूदी भइहाल्यो, कोही इसाई र कोही अन्य-र दूर्भाग्यले मुसलमानहरूमा स्वयं पनि गिरोह ।

فَمَنْ يَعْمَلْ مِنَ الصّٰلِحٰتِ وَهُوَ مُؤْمِنٌ فَلَا كُفْرَانَ لِسَعْيِهٖ ۚ وَاِنَّا لَهٗ كٰتِبُوْنَ ﴿٩٤﴾

(९४) अनि जसले सत्कर्म गर्छन् र त्यो मोमिन (एकेश्वरवादी) पनि हुन्छ, त त्यसका प्रयत्नको कुनै उपेक्षा हुनेछैन । हामी त त्यसलाई त्यसको लागि लेखिराखेका छौं ।

وَحَرٰمٌ عَلٰى قَرْيَةٍ اَهْلَكْنٰهَآ اَنَّهُمْ لَا يَرْجِعُوْنَ ﴿٩٥﴾

(९५) र जुन वस्तीलाई हामीले विनष्ट गरिदियौं त्यसको लागि अनिवार्य छ कि त्यहाँका मानिसहरू फर्केर आउने छैनन् ।[1]

حَتّٰٓى اِذَا فُتِحَتْ يَاْجُوْجُ وَمَاْجُوْجُ وَهُمْ مِّنْ كُلِّ حَدَبٍ يَّنْسِلُوْنَ ﴿٩٦﴾

(९६) यहाँसम्मकि याजूज र माजूज फुकाइनेछन् र उनी प्रत्येक उच्च ठाउँबाट दगुर्दै आउनेछन् ।[2]

وَاقْتَرَبَ الْوَعْدُ الْحَقُّ فَاِذَا هِيَ شَاخِصَةٌ اَبْصَارُ الَّذِيْنَ كَفَرُوْا

(९७) तथा सत्य वचन निकट आइहाल्नेछ त्यसबेला काफिरहरूका आँखा छक्क परेका

---

गिरोहहरू पैदा भए, र यिनीहरू पनि वीसौं समूहमा विभाजित भए । यी सबैको न्याय जब यिनी प्रभुका समक्ष प्रस्तुत हुनेछन् त्यतिखेर मात्र हुनेछ ।

[1] حرام निषेध (आवश्यक) को अर्थमा छ, जस्तो कि अनुवादबाट स्पष्ट छ, वा फेरि لا يَرْجِعُون मा ﻻ अधिक छ अर्थात् जुन वस्तीलाई हामीले ध्वस्त गरिदियौं त्यो संसारमा फर्केर आउनु असम्भव छ (आउनै सक्दैन)

[2] याजूज र माजूजको आवश्यक विवरण सूर: कहफ़को अन्तमा वर्णित भइसकेको छ । आदरणीय ईसाको उपस्थितिमा उनीहरू प्रलयका निकट प्रदर्शित हुनेछन् र यति वेग गतिले चारैतिर फैलिने छन् कि प्रत्येक ठाउँमा यिनी दौडिराखेका प्रतीत हुनेछन् । उनका आतङ्क र कुकर्महरूबाट ईमानवाला हैरान हुनेछन् । अनि आदरणीय ईसाका शापवाट यिनीहरू नष्ट भइहाल्नेछन् । उनका शवहरूको दुर्गन्ध हरेक दिशामा फैलने छ, यहाँसम्मकि अल्लाह तआला पंक्षीहरूलाई पठाउने छ, जो उनका शवहरूलाई उठाएर समुद्रमा फ्याकिदिनेछन् । त्यसपश्चात एउटा निकै तेज वर्षा गर्नेछ, जसबाट सम्पूर्ण धर्ती स्वच्छ हुनेछ । (यो पूरा विवरण सहीह हदीसमा वर्णित छ, विस्तारका लागि व्याख्या इब्ने कसीर हेर्नुस्)

يَٰوَيۡلَنَا قَدۡ كُنَّا فِي غَفۡلَةٖ مِّنۡ هَٰذَا بَلۡ كُنَّا ظَٰلِمِينَ ۝٩٧

खुल्ला हुनेछन्[1] कि हाय अफसोच ! हामी यस दुर्दशाबाट निश्चिन्त थियौं, बरु वास्तवमा हामी अपराधी थियौं ।

إِنَّكُمۡ وَمَا تَعۡبُدُونَ مِن دُونِ ٱللَّهِ حَصَبُ جَهَنَّمَ أَنتُمۡ لَهَا وَٰرِدُونَ ۝٩٨

(९८) तिमी तथा अल्लाहबाहेक ज-जसको पूजा गर्दछौ, सबै नरकका इन्धन बन्नेछौ, तिमी सबै त्यस (नरक) मा जानेवाला हौ ।[2]

لَوۡ كَانَ هَٰٓؤُلَآءِ ءَالِهَةٗ مَّا وَرَدُوهَاۖ وَكُلّٞ فِيهَا خَٰلِدُونَ ۝٩٩

(९९) यदि उनीहरू (साँचो) देवता भएको भए नरकमा प्रवेश गर्दैनथे जबकि ती सबै त्यसैमा सधैं रहनेवाला हुन् ।[3]

لَهُمۡ فِيهَا زَفِيرٞ وَهُمۡ فِيهَا لَا يَسۡمَعُونَ ۝١٠٠

(१००) उनी त्यहाँ कराइराखेका हुनेछन् तथा त्यहाँ केही पनि सुन्न सक्ने छैनन् ।[4]

---

[1]अर्थात् याजूज तथा माजूज प्रकट भए पश्चात केयामतको जुन वचन छ, त्यो सत्य छ, अत्यन्त निकट आउनेछ तथा जब यो क़ेयामत घटित हुनेछ त काफ़िरहरूका आँखा छक्क परी खुलेको-खुलै रहनेछन् ।

[2]यो आयत मक्काका मूर्तिपूजकहरूको विषयमा अवतरित भयो, जो लात, मनात, उज़्ज़ा तथा हुबलको पूजा गर्दथे । यी सबै पत्थरका मूर्तिहरू थिए । जुन जड़ अर्थात निर्जीव थिए, यसैकारण आयतमा ما تعبدون को शब्द छ तथा अरबी भाषामा ما निर्बोधका लागि आउँछ । अर्थात् भनिंदैछ कि तिमी पनि तथा तिम्रा देवता पनि ज-जसका मूर्तिहरू बनाएर तिमीले पूजाका लागि राखेका छौ, सबै नरकको अग्निका इन्धन हुन् । ढुङ्गा (पाषाण) का मूर्तिहरूको यद्यपि कुनै अपराध छैन किनभने उनी निर्जीव तथा निर्बोध छन् परन्तु उनीहरूलाई पूजारीहरूका साथ नरक़मा केवल मूर्तिहरूलाई अत्याधिक अपमानित गर्नको निम्ति हालिनेछ कि जुन देवताहरूलाई तिमी आफ्नो सहारा ठान्दथ्यौ, उनी पनि तिमीसँग नरकमा नरकका इन्धन हुन्छन् ।

[3]अर्थात् यदि वास्तवमा उनी पूज्य भएको भए अधिकार प्राप्त हुन्थे र तिमीलाई नरकमा जानबाट रोकिहाल्थे । परन्तु उनीहरू त स्वयं नरकमा शिक्षा स्वरूप गइराखेका छन् । तिमीलाई जानबाट कसरी रोक्न सक्दछन् ? परिणाम स्वरूप देवता तथा पूजारी दुवै सधैं नरक़मा रहनेछन् ।

[4]अर्थात् सबै अत्यन्त दुख एवं शोकका कारण रोई-कराई राखेका हुनेछन्, जसका कारण उनी एक-अर्काको आवाज पनि सुन्न सक्ने छैनन् ।

(१०१) परन्तु जसका लागि हाम्रो तर्फबाट अघि नै पुण्य निर्धारित छ उनी सबै नरकबाट टाढा नै राखिने छन् ।[1]

إِنَّ الَّذِينَ سَبَقَتْ لَهُم مِّنَّا الْحُسْنَىٰ أُولَٰئِكَ عَنْهَا مُبْعَدُونَ ﴿١٠١﴾

(१०२) उनी त नरकको चाल पनि थाहा पाउन सक्ने छैनन् तथा आफ्ना इच्छित वस्तुहरूका साथ सधैं रहनेवाला हुनेछन् ।

لَا يَسْمَعُونَ حَسِيسَهَا ۖ وَهُمْ فِي مَا اشْتَهَتْ أَنفُسُهُمْ خَالِدُونَ ﴿١٠٢﴾

(१०३) त्यो अति घबराहट पनि[2] उनीहरूलाई उदासीन गर्नसक्ने छैन तथा फरिश्ताहरूले उनको स्वागत गर्नेछन् कि यही तिम्रो त्यो दिन हो जसको तिमीलाई बचत दिने गरिन्थ्यो ।

لَا يَحْزُنُهُمُ الْفَزَعُ الْأَكْبَرُ وَتَتَلَقَّاهُمُ الْمَلَائِكَةُ هَٰذَا يَوْمُكُمُ الَّذِي كُنتُمْ تُوعَدُونَ ﴿١٠٣﴾

(१०४) जुन दिन हामी आकाशलाई यसप्रकार बेरिदिनेछौं जसरी रोलका कागज (पन्जिका) बेरिन्छन्,[3] जस्तो हामीले प्रथम

يَوْمَ نَطْوِي السَّمَاءَ كَطَيِّ السِّجِلِّ لِلْكُتُبِ ۚ كَمَا بَدَأْنَا أَوَّلَ خَلْقٍ

[1]केही मानिसहरूको मनमा यो सन्देह उत्पन्न हुनसक्थ्यो अथवा मूर्तिपूजकहरूको तर्फबाट उत्पन्न गराउन सकिन्थ्यो, जस्तो कि वास्तवमा भइराखेको छ कि इबादत (उपासना) त आदरणीय ईसा, वज़ैर, फरिश्ताहरू तथा धेरै पुण्य आत्माहरूको गरिन्छ । त के यिनी पनि आफ्ना पूजारीहरूका साथ नरकमा हालिनेछन् ? यस आयतमा त्यसको पनि निवारण गरिएको छ कि यी मानिसहरू त अल्लाहका श्रेष्ठ भक्त थिए जसका पुण्यका कारण अल्लाहका तर्फबाट पुण्य अर्थात् स्थायी सुख अथवा स्वर्गको शुभ-सूचना निश्चित गरिसकिएको छ । यी नरकबाट टाढा नै राखिनेछन् । यिनै शब्दहरूबाट यो भावार्थ पनि निस्कन्छ कि संसारमा जो यो इच्छा राखेका हुनेछन् कि उनका कब्रहरू (चिहान) मा गुम्बत बनाइयोस् तथा मानिसहरू उनलाई कष्ट-निवारक संकटमोचन ठानेर भोग-प्रसाद चढाऊन् तथा उनको पूजा गरून्, यिनी पनि पत्थरका मूर्तिहरूको जस्तै नरकका इन्धन बन्नेछन् किनभने अल्लाहबाहेक कसैको इबादत गर्नुका प्रचारक سبقت لهم منا الحسنى को परिधिमा निःसन्देह आउँदैनन् ।

[2]बडो व्यग्रताबाट कसैको मृत्यु अथवा इस्राफ़ीलको नरसिंघा हो अथवा त्यो क्षण जब स्वर्ग-नरकका मध्ये मृत्युलाई वध गरिदिइनेछ । अर्को कुरो अर्थात् इस्राफ़ीलको नरसिंघा तथा क़ेयामत आउनु अधिक उचित छ ।

[3]अर्थात् जुनप्रकार लिपिक लेखिए पश्चात पाना अथवा लेख पुस्तिकालाई बेरेर राखिदिन्छ । जस्तो अन्य स्थानमा आदेश गऱ्यो :

نُعِيدُهُۥ وَعۡدًا عَلَيۡنَآ إِنَّا كُنَّا فَٰعِلِينَ ١٠٤

पटक पैदा गरेका थियौं यसैप्रकार पुनः गर्नेछौं, यो हाम्रो संकल्पित वचन हो तथा यो हामी अवश्य गरेर नै छाड्नेछौं ।

وَلَقَدۡ كَتَبۡنَا فِي ٱلزَّبُورِ مِنۢ بَعۡدِ ٱلذِّكۡرِ أَنَّ ٱلۡأَرۡضَ يَرِثُهَا عِبَادِيَ ٱلصَّٰلِحُونَ ١٠٥

(१०५) तथा हामी ज़बूरमा चेतावनी तथा शिक्षाका पश्चात यो लेखिसकेका छौं कि धर्तीका उत्तराधिकारी मेरा सत्कर्मी भक्त नै हुनेछन् ।[1]

إِنَّ فِي هَٰذَا لَبَلَٰغٗا لِّقَوۡمٍ عَٰبِدِينَ ١٠٦

(१०६) उपासक भक्तहरूका लागि त यसमा एउटा ठूलो सूचना छ ।[2]

﴿ وَٱلسَّمَٰوَٰتُ مَطۡوِيَّٰتُۢ بِيَمِينِهِۦ ﴾

"आकाश उसका दाहिने हातमा टाँसिएका हुनेछन् ।" (सूरःअल-जुमर-६७) سِجِل को अर्थ पत्रावली अथवा पञ्जिका हो ।| لِلْكُتُبِ को अर्थ हो على الكتاب بمعنى المكتوب (तफ़सीर इब्ने कसीर) अर्थ यो हो कि लेखकका लागि लेखिएका पत्रहरूलाई बेर्नु जसरी सरल छ, त्यसैप्रकार अल्लाह तआलाका लागि विस्तृत आकाशलाई आफ्नो हातमा बेर्नु कुनै कठिन छैन ।

[1]ज़बूरसित तात्पर्य यो त ज़बूर नै हो तथा ذكر सित तात्पर्य शिक्षा-दीक्षा, जस्तो कि अनुवादमा छ अथवा ज़बूरसित तात्पर्य सबै प्राचीन आकाशीय पुस्तकहरू तथा ذكر सित तात्पर्य सुरक्षित पुस्तक (लौह महफूज़) हो । अर्थात् प्रथम त "सुरक्षित पुस्तक" मा यो लिखित छ तथा त्यसको पश्चात आकाशीय पुस्तकहरूमा पनि यो कुरा लेख़िदै आइरहेको छ कि धर्तीका उत्तराधिकारी पुनीत मानिस हुनेछन् । धर्तीसित तात्पर्य केही व्याख्याकारहरूका निकट स्वर्ग हो तथा केहीका निकट काफ़िरहरूका धर्ती अर्थात् अल्लाहका पुनीत भक्त धर्तीमा अधिपति हुनेछन् तथा यसमा कुनैप्रकारको सन्देह छैन कि मुसलमान जबसम्म अल्लाहका पुनीत भक्त बनिरहे, उनी संसारमा प्रभावशाली तथा सफल रहे तथा भविष्यमा पनि जतिखेर यी गुणहरूबाट युक्त हुनेछन् अल्लाहका यस वचन अनुसार धर्तीको अधिपत्य (राज्य) उनको पासमा नै रहनेछ । यसकारण मुसलमानहरूका राज्यवाट बञ्चित हुनुको आधुनिक परिस्थितिबाट कुनै प्रकारको शंका तथा सन्देह हुनु हुँदैन । यो वचन भक्तहरूका सदाचारसित प्रतिबन्धित छ । तथा إذا فات الشرط فات المشروط का अनुसार जब मुसलमान यस विशेषताबाट बञ्चित भए, त राज्यबाट पनि वञ्चित गरिए । अर्थात् यस राज्य प्राप्त गर्ने मार्ग भनियो तथा त्यो हो असल कर्म, अर्थात् अल्लाह तथा रसूलका आदेशानुसार जीवनयापन गर्नु तथा त्यसका सीमा एवं नियमहरूका अनुसार कार्यरत रहनु ।

[2]في هذا सित तात्पर्य त्यो भाषण तथा चेतावनी हो जुन यस सूरःमा विभिन्न प्रकारले वर्णन गरिएको छ । بلاغ सित तात्पर्य अधिक पर्याप्त तथा लाभ छ, अर्थात् त्यो पर्याप्त एवं लाभकारी छ ।

وَمَآ أَرۡسَلۡنَٰكَ إِلَّا رَحۡمَةٗ لِّلۡعَٰلَمِينَ ۝١٠٧

(१०७) तथा हामीले तपाईंलाई सम्पूर्ण विश्वका लागि दया बनाएर पठाएका छौं ।[1]

قُلۡ إِنَّمَا يُوحَىٰٓ إِلَيَّ أَنَّمَآ إِلَٰهُكُمۡ إِلَٰهٞ وَٰحِدٞۖ فَهَلۡ أَنتُم مُّسۡلِمُونَ ۝١٠٨

(१०८) भनिदिनुस् कि मतिर त मात्र प्रकाशना गरिन्छ कि तिमी सबैको पूज्य एउटै नै छ, के तिमी पनि त्यसलाई मान्नेवाला हौ ?[2]

अथवा यसबाट तात्पर्य कुरआन मजीद हो जसमा मुसलमानहरूका लागि लाभ एवं पर्याप्तता छ । भक्तसित तात्पर्य विनम्रता तथा विनयसित अल्लाहका इबादत गर्नेहरू, तथा शैतान एवं मनका इच्छाहरूमाथि अल्लाहको आज्ञाकारितालाई बरीयता दिनेवाला हुन् ।

[1]यसको अर्थ यो हो कि जो उहाँ सल्लल्लाहु अलैहि वसल्लमको रिसालतमा ईमान ल्याउनेछ, उसले मानौं यस दयालाई स्वीकार गरिसक्यो तथा अल्लाहका यी वरदानहरूप्रति कृतज्ञता प्रकट गऱ्यो । परिणामस्वरूप लोक-परलोकका सुखहरूलाई प्राप्त गर्नेछ, तथा किनभने उहाँको रिसालत पूर्ण विश्वका लागि छ अत: उहाँ पूर्ण विश्वका लागि कृपा बनेर अर्थात् आफ्ना शिक्षाहरूद्वारा लोक तथा परलोकका सुखहरूका भागी बनाउनका निम्ति आउनु भएछ । केही मानिसले यस आधारमा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई अखिल जगतका लागि कृपा सिद्ध गरेका छन् कि उहाँ सल्लल्लाहु अलैहि वसल्लमका कारण यो मानव जाति पूर्णरूपले विनाश तथा ध्वस्त हुनबाट सुरक्षित गरियो, जस्तो कि विगत समुदायहरूलाई अशुद्ध शब्दहरू जस्तै मिटाइयो, उम्मते मोहम्मदिया (जो यस आधारमा सम्पूर्ण मानव जातिमा आधारित छ कि यसमा तिनी पनि छन् जसले तपाईंलाई माने तथा तिनी पनि जसका लागि उहाँ उपदेशक बनाएर पठाइए) माथि सर्वनाशी प्रकोप आउने छैन अन्तिम ईशदूतका कथनहरू (आहादीस) बाट विदित हुन्छ कि मुशरिक (मिश्रणवादीहरूका लागि) अभिशाप नदिनु पनि उहाँको दयाको एउटा भाग थियो, (सहीह मुस्लिम संख्या २००६) यसैप्रकार क्रोधमा कुनै मुसलमानलाई धिक्कार वा अपशब्द भन्नुलाई प्रलयका दिन दयाका कारण बताउनु उहाँको दयाको अंश हो । (मुसनद अहमद क्रम संख्या ५/४३७, अबू दाऊद संख्या ४६५९ तथा अलबानीका अहादीसे सहीहा १७५८) यसैकारण उहाँले भन्नुभयो कि «رَحْمَةٌ مُهْدَاةٌ» (सहीहुल जामे अस्सग़ीर संख्या २३४५) “म साक्षात दया बनेर आएको हूँ जुन अल्लाहको तर्फबाट जगतवासीहरूका लागि एउटा उपहार हो ।”

[1]यसमा यो स्पष्ट गरिएको छ कि मूल दया एकेश्वरवादलाई ग्रहण गर्नु तथा शिर्कबाट बच्नु हो ।

فَإِنْ تَوَلَّوْا فَقُلْ آذَنْتُكُمْ عَلَىٰ سَوَاءٍ ۖ وَإِنْ أَدْرِي أَقَرِيبٌ أَمْ بَعِيدٌ مَا تُوعَدُونَ ﴿١٠٩﴾

(१०९) अनि यदि उनीहरू विमुख हुन्छन् भने भनिदिनुस् कि मैले तिमीलाई सामान्यरूपले सतर्क गरिसकेको छु।[१] मलाई ज्ञान छैन कि जसको वचन तिमीसित गरिदैछ, त्यो निकट छ अथवा टाढा छ ।[२]

إِنَّهُ يَعْلَمُ الْجَهْرَ مِنَ الْقَوْلِ وَيَعْلَمُ مَا تَكْتُمُونَ ﴿١١٠﴾

(११०) निःसन्देह (अल्लाह तआला) त तिम्रा खुला कुराहरूलाई जान्दछ तथा जसलाई तिमी लुकाउँछौ त्यसलाई पनि जान्दछ ।

وَإِنْ أَدْرِي لَعَلَّهُ فِتْنَةٌ لَكُمْ وَمَتَاعٌ إِلَىٰ حِينٍ ﴿١١١﴾

(१११) तथा मलाई यसको पनि ज्ञान छैन, सम्भव छ कि यो तिम्रो परीक्षा हो तथा एउटा निर्धारित समयसम्मको लाभ हो ।[३]

قَالَ رَبِّ احْكُمْ بِالْحَقِّ ۗ وَرَبُّنَا الرَّحْمَٰنُ الْمُسْتَعَانُ عَلَىٰ مَا تَصِفُونَ ﴿١١٢﴾

(११२) (नबीले) स्वयं भने हे पालनकर्ता ! न्यायका साथ निर्णय गरिदेउ तथा हाम्रो प्रभु अत्यन्त दयालु छ जससित सहायता माँगिन्छ ती कुराहरुमा जुन तिमी वर्णन गरिराखेको छौ ।[४]



---

[१]अर्थात् जुनप्रकारले म जान्दछु कि तिमी एकेश्वरवादका तथा इस्लामका आमन्त्रणवाट विमुख भएर मेरा शत्रु हौ, त्यसैप्रकार तिमीलाई पनि यो विदित हुनुपर्छ कि म तिम्रो शत्रु हूँ तथा हाम्रो तिम्रो आपसमा स्पष्ट विशेष छ ।

[२]यस वचनवाट तात्पर्य क़ेयामत हो अथवा इस्लाम तथा मुसलमानहरुको विजयको वचन अथवा त्यो वचन जव अल्लाहका तर्फबाट तिम्रा विरुद्ध युद्ध गर्न मलाई आज्ञा प्रदान गरिनेछ ।

[३]अर्थात् त्यस अल्लाहका वचनमा विलम्ब, म जान्दिन कि तिम्रो परीक्षाको लागि हो अथवा एउटा विशेष समयसम्म लाभ उठाउनुको अवसर प्रदान गर्नु हो ।

[४]अर्थात् मेरो विषयमा जुन तिमी विभिन्न प्रकारका कुरा गर्दैरहन्छौ, अथवा अल्लाहका लागि सन्तान ठहराउँछौ, ती सबै कुराका सापेक्ष, त्यो प्रभु नै दया गर्नेवाला तथा सहायता गर्नेवाला छ ।

## सूरतुल हज्ज-२२

سُورَةُ الحَجّ

सूरतुल हज्ज* मदीनामा अवतरित भएको तथा यसका ७८ आयतहरू तथा १० रूकूअ छन्।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुभारम्भ गर्दछु अल्लाहको नामबाट जो अत्यन्त दयालु तथा कृपालु छ।

يٰٓاَيُّهَا النَّاسُ اتَّقُوْا رَبَّكُمْ ۚ اِنَّ زَلْزَلَةَ السَّاعَةِ شَيْءٌ عَظِيْمٌ ①

(१) हे मानिसहरू ! आफ्ना प्रभुसित तर्स ! निःसन्देह क़ेयामतको समयको भूकम्प ठूलो भयानक कुरो हो।

يَوْمَ تَرَوْنَهَا تَذْهَلُ كُلُّ مُرْضِعَةٍ عَمَّآ اَرْضَعَتْ وَتَضَعُ كُلُّ ذَاتِ حَمْلٍ حَمْلَهَا وَتَرَى النَّاسَ سُكٰرٰى وَمَا هُمْ بِسُكٰرٰى وَلٰكِنَّ عَذَابَ اللّٰهِ شَدِيْدٌ ②

(२) जुन दिन तिमी त्यसलाई देख्नेछौ, प्रत्येक दूध खुवाउने माता आफ्नो दूध खाइराखेको शिशुलाई बिर्सने छ तथा सबै गर्भवती आफ्नो गर्भाभार राखिदिनेछ तथा तिमीले देख्नेछौ कि मानिसहरू लड्डिएको देखिनेछन् जबकि उनीहरू नशामा हुने छैनन्, बरु अल्लाहको प्रकोप अत्यन्त कठोर छ।

---

*यसको मक्का तथा मदीनामा अवतरित भएको कुरोमा मतभेद छ। उचित कुरो यो हो कि यसको केही भाग मक्कामा तथा केही भाग मदीनामा अवतरित भयो। यो कुर्तबीको कथन हो। (फ़तहुल क़दीर) यो कुरआन करीमको एउटै सूरः छ जसमा दुई सजदाहरू छन्।

[1]उपरोक्त आयतमा जुन भूकम्पको वर्णन छ, त्यसका परिणाम अर्का आयतमा वर्णित गरिएका छन्, जसको अर्थ मानिसहरूमा अत्याधिक भय, डर तथा घबराहट हुनु हो, यो क़ेयामतभन्दा पूर्व हुनेछ तथा त्यसको साथै दुनियाँको विनाश भइहाल्नेछ। अथवा यो क़ेयामतका पश्चात त्यस समय हुनेछ, जब मानिसहरू कब्रहरूबाट उठेर हश्रका मैदानमा एकत्रित हुनेछन्। अधिकतर व्याख्याकार प्रथम विचारसित सहमत छन् जबकि केही व्याख्याकार द्वितीय विचारको पक्षमा छन्। तथा त्यसका पक्षमा ती हदीस प्रस्तुत गर्दछन् जस्तै अल्लाह तआला आदमलाई आदेश दिनेछ कि आफ्ना सन्देश आफ्ना सन्तानमा एक हजार मध्येबाट ९९९ लाई नरकका लागि निकालिदिनु। यो सुनेर गर्भवतीहरुका गर्भ तुहिने छन्, बालक बृद्ध भइहाल्नेछन् तथा मानिस अचेत देखिनेछन्, यद्यपि उनी अचेत हुने छैनन्, केवल यातनाको कठोरता हुनेछ। यो कुरो सहाबालाई अत्याधिक भारी (निकै गम्भीर) लाग्यो, उनका अनुहारका रङ्ग फेरियो।

وَمِنَ النَّاسِ مَنْ يُّجَادِلُ فِي اللّٰهِ بِغَيْرِ عِلْمٍ وَّيَتَّبِعُ كُلَّ شَيْطٰنٍ مَّرِيْدٍ ۝٣

(३) तथा केही मानिस अल्लाहका विषयमा कुरा बनाउँछन् त्यो पनि अज्ञानताका साथ तथा प्रत्येक उद्दण्डता शैतानको अनुशरण गर्दछन् ।[1]

كُتِبَ عَلَيْهِ اَنَّهٗ مَنْ تَوَلَّاهُ فَاَنَّهٗ يُضِلُّهٗ وَيَهْدِيْهِ اِلٰى عَذَابِ السَّعِيْرِ ۝٤

(४) जसमा अल्लाहको निर्णय लेखिसकिएको छ[2] कि जुनसुकै पनि उसँगको मित्रता गर्नेछ त्यसले उसलाई मार्ग-विचलित गरिदिनेछ तथा उसलाई अग्निको यातनातिर लग्नेछ ।

يٰٓاَيُّهَا النَّاسُ اِنْ كُنْتُمْ فِيْ رَيْبٍ مِّنَ الْبَعْثِ فَاِنَّا خَلَقْنٰكُمْ مِّنْ تُرَابٍ ثُمَّ مِنْ نُّطْفَةٍ ثُمَّ مِنْ عَلَقَةٍ ثُمَّ مِنْ مُّضْغَةٍ مُّخَلَّقَةٍ

(५) हे मानिसहरू ! यदि तिमीलाई मर्नुका पश्चात जीवित हुने कुरोमा सन्देह छ, त विचार गर, हामीले तिमीलाई माटोले पैदा गऱ्यौं, अनि वीर्यबाट, अनि रगतको डल्लो, त्यसपछि मासुको डल्लोबाट जुन रूप दिइएको थियो तथा बिना चित्र थियो ।[3] यो

---

नबी सल्लल्लाहु अलैहि वसल्लमले जुन देखेर भन्नुभयो (न आत्तिनु) यी ९९९ याजूज तथा माजूज मध्येबाट हुनेछ तथा तिमीमध्येबाट केवल एउटा हुनेछ, तिम्रो (संख्या) मानिसहरूमा यसप्रकार हुनेछ जस्तै सेतो रङ्गको गोरू छेउमा कालो रौं अथवा कालो रङ्गको गोरूको छेउमा सेतो रङ्गको रौं हुन्छन् । तथा मलाई आशा छ कि स्वर्गवासीहरूमा तिमी चौथाई अथवा तिहाई अथवा आधा हुनेछौ । यसलाई सुनेर सहाबाले हर्षोल्लासमा अल्लाहु अकबर को नारा उद्घोषित गरे । (सहीह बुख़ारी तफ़सीर सूर: अल-हज) प्रथम विचार पनि अनुचित छैन । केही क्षीण हदीसहरूमा त्यसको पनि पुष्टि हुन्छ । अत: भूकम्प तथा त्यसका रूपबाट तात्पर्य यदि व्यग्रता तथा भयानकताको तीब्रता छ (तथा प्रत्यक्ष यही छ) त तीब्र घबराहट तथा भयानकताको यो रूप दुबै अवसरहरूमा हुनेछ । यसकारण अवस्था यसैप्रकार हुनेछ जस्तो यस आयतमा तथा सहीह बुख़ारीमा वर्णन गरिएको छ ।

[1]जस्तै यो कि अल्लाह तआ़ला पुन: पैदा गर्नुको सामर्थ्य राख्दैन, अथवा त्यसको सन्तान छ आदि ।

[2]अर्थात् शैतानका विषयमा अल्लाहका भाग्य-लेखमा यो अंकित छ ।

[3]अर्थात् वीर्यबाट चालीस दिन पश्चात बाक्लो रक्त (अलक़:) तथा अलक़:बाट मासुको डल्लो (मुजग़:) छ, مُخَلَّقَةٍ सित तात्पर्य त्यो शिशु हो जसको जन्म स्पष्ट तथा आकार एवं रूप प्रकट हुन्छ, यस्ता शिशुमा प्राण हालिन्छन् तथा पूर्ण

وَغَيْرِ مُخَلَّقَةٍ لِّنُبَيِّنَ لَكُمْ ۚ وَنُقِرُّ فِي الْأَرْحَامِ مَا نَشَاءُ إِلَىٰ أَجَلٍ مُّسَمًّى ثُمَّ نُخْرِجُكُمْ طِفْلًا ثُمَّ لِتَبْلُغُوا أَشُدَّكُمْ ۖ وَمِنكُم مَّن يُتَوَفَّىٰ وَمِنكُم مَّن يُرَدُّ إِلَىٰ أَرْذَلِ الْعُمُرِ لِكَيْلَا يَعْلَمَ مِن بَعْدِ عِلْمٍ شَيْئًا ۚ وَتَرَى الْأَرْضَ هَامِدَةً فَإِذَا أَنزَلْنَا عَلَيْهَا الْمَاءَ اهْتَزَّتْ

हामी तिमीलाई स्पष्ट गरिदिन्छौं[1] तथा हामी जसलाई चाहन्छौं एउटा निर्धारित समयसम्म माताको गर्भमा राख्दछौं ।[2] अनि तिमीलाई शिशुका रूपमा संसारमा ल्याउन्छौं, ताकि त्यसपछि तिमी आफ्नो पूर्ण यौवनलाई पुग, तिमीमध्येबाट केही ती हुन् जो मरिहाल्छन्[3] तथा केही जीर्ण आयुतिर फर्काइन्छन् ताकि त्यो एक वस्तुसित परिचित हुनुका पश्चात पुनः अपरिचित भइहालोस् ।[4] तिमी देख्छौ कि धर्ती बाँझो तथा सुकेको छ, अनि जब हामी त्यसमा वर्षा गर्दछौं, त

भएपछि त्यसको जन्म हुन्छ तथा غير مخلقة यसको विपरीत जसको आकार तथा रूप प्रकट नभएको होस्, न त्यसमा प्राण फुकिएको होस् तथा सबैभन्दा पूर्व नै त्यो तुहिन्छ । सहीह हदीसहरूमा पनि माताको गर्भाशयको वर्णन गरिएको छ । जस्तै एक हदीसमा छ कि वीर्य चालीस दिनका पश्चात बाक्लो रगत (अलक़ः) बन्दछ, अनि चालीस दिनका पश्चात डल्लो अथवा मासुको टुकडा (मुदगः) को रूप लिन्छ । अनि अल्लाहको तर्फबाट एउटा फरिश्ता आउँछ, जो त्यसमा प्राण फुक्दछ, अर्थात् चार महीनाका पश्चात प्राण फुकिन्छ तथा शिशु एउटा स्पष्ट रूपको आकार लिन्छ, (सहीह बुख़ारी, किताब अल-अंबिया व किताबुल क़दर, मुस्लिम किताबुल क़दर बाब कैफ़ियतुल (ख़लक़िल आदमी)

[1]अर्थात् यसप्रकार हामी आफ्नो शक्ति एवं सामर्थ्य तथा सृष्टिको उत्पत्ति तिम्रो लागि वर्णन गर्दछौं

[2]अर्थात् जसलाई नष्ट गर्ने उद्देश्य हुँदैन ।

[3]अर्थात् पूर्ण युवा अवस्थाभन्दा पूर्व नै । पूर्व युवा अवस्थासित तात्पर्य वयस्कता अथवा बुद्धिमत्ता एवं शक्तिशाली तथा बुझ्ने आयु हो जुन तीस वर्षदेखि चालीस वर्षसम्मको मध्येको आयु हो ।

[4]यसबाट तात्पर्य वृद्धा अवस्थामा मनुष्यको शक्ति क्षीण हुनुका साथ बुद्धि एवं स्मरण गर्ने शक्ति पनि क्षीण हुन्छ तथा स्मरण राख्नु बुद्धि एवं समझमा बालकको समान हुन्छ जसलाई सूरः यासीनमा ﴿وَمَن نُّعَمِّرْهُ نُنَكِّسْهُ فِي الْخَلْقِ﴾ तथा सूरः तीनमा ﴿ثُمَّ رَدَدْنَاهُ أَسْفَلَ سَافِلِينَ﴾ सित सम्बन्धित गरिएको छ ।

وَرَبَتْ وَأَنْۢبَتَتْ مِن كُلِّ زَوْجٍۭ بَهِيجٍ ⑤

परिवर्तित हुन्छे तथा ढाडिएर आउँछ तथा हरेक प्रकारको राम्रो वनस्पति उमार्दछ ।[1]

ذَٰلِكَ بِأَنَّ ٱللَّهَ هُوَ ٱلْحَقُّ وَأَنَّهُۥ يُحْيِ ٱلْمَوْتَىٰ وَأَنَّهُۥ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ⑥

(६) यो यसकारण कि अल्लाह नै सत्य छ तथा त्यही मृतकरूहरूलाई जीवित गर्दछ तथा त्यो प्रत्येक वस्तुमाथि सामर्थ्यवान छ ।

وَأَنَّ ٱلسَّاعَةَ ءَاتِيَةٌ لَّا رَيْبَ فِيهَا وَأَنَّ ٱللَّهَ يَبْعَثُ مَن فِى ٱلْقُبُورِ ⑦

(७) तथा यो कि क़ेयामत निश्चय नै आउने छ जसमा कुनै शंका अथवा सन्देह छैन तथा निःसन्देह अल्लाह (तआ़ला) कब्र (चिहान) वालाहरूलाई पुनः जीवित गर्नेछ।

وَمِنَ ٱلنَّاسِ مَن يُجَٰدِلُ فِى ٱللَّهِ بِغَيْرِ عِلْمٍ وَلَا هُدًى

(८) तथा केही मानिसहरू अल्लाहको विषयमा बिना ज्ञान, तथा बिना मार्गदर्शन तथा बिना

[1]यो मृतकलाई जीवित गर्नुमा अल्लाह तआ़लाको सामर्थ्यवान हुने कुरोको दोस्रो तर्क हो । प्रथम तर्क जुन वर्णित भयो, यो थियो जुन शक्ति एक तुच्छ विर्यको थोपाबाट यसप्रकार एउटा मनुष्यको रूप बनाइदिन्छ तथा एउटा आकर्षक रूप प्रदान गरिदिन्छ, त्यसका अतिरिक्त विभिन्न अवस्थाहरूबाट गुज्रदै बृद्धा अवस्थाको यस्तो अवस्थामा लैजान्छ जहाँ त्यसको शरीरदेखि लिएर त्यसका बौद्धिक एवं मस्तिष्कको शक्ति सबै क्षीणता, त्रुटि एवं कमीहरूको शिकार हुन पुग्दछ । के त्यसको लागि पुनः जीवित गर्नुमा कठिनाई छ ? निःसन्देह जुन शक्ति मनुष्यलाई यी अवस्थाहरूबाट पार गर्नसक्छ त्यही शक्ति मर्नुका पश्चात पनि, त्यसलाई पुनः एउटा नयाँ जीवन तथा रूप प्रदान गर्न सक्दछ। दोस्रो तर्क यो दिइयो कि हेर, धर्ती बन्जर तथा मृत रूपमा हुन्छ, परन्तु वर्षाका पश्चात कुन प्रकार जीवित तथा प्रफुल्लित तथा विभिन्न प्रकार एवं अन्न फल तथा रङ्गीचङ्गी फुलहरूले भरिन्छ। त्यसैप्रकार अल्लाह तआ़ला क़ेयामतका दिन मनुष्यहरूलाई उनका चिहानहरूबाट उभ्याउनेछ । जुनप्रकार हदीसमा छ कि एक साहबीले सोधे अल्लाह तआ़ला जुनप्रकारले मनुष्यहरूलाई पैदा गर्नेछ, त्यसको कुनै निशानी (लक्षण) सृष्टिमध्येबाट वर्णन गर्नुहोस् । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : "के तिमी यस्तो घाटीबाट गुज्रेका छौ जुन सुख्खा तथा बाँझो थियो, अनि पुनः त्यसलाई हरियालीको रूपमा देखेका छौ ? उसले भन्यो, "हो" । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, बस त्यसैप्रकार मनुष्यहरूको पुनः जीवित हुनेछ ।" (मुसनद अहमद भाग ४, पृष्ठ ११, इब्ने माजा अल-मुकद्दमा हदीस संख्या १८०)

وَلَا كِتٰبٍ مُّنِيْرٍ ۝٨

कुनै (दिव्य) प्रकाशवाली पुस्तक झगडा गर्दछन् ।

ثَانِيَ عِطْفِهٖ لِيُضِلَّ عَنْ سَبِيْلِ اللّٰهِ ۭ لَهٗ فِي الدُّنْيَا خِزْيٌ وَّنُذِيْقُهٗ يَوْمَ الْقِيٰمَةِ عَذَابَ الْحَرِيْقِ ۝٩

(९) आफ्नो कोल्टे फर्नेवाला बनेर[1] यसकारण कि अल्लाहको मार्गबाट विचलित (विपथ) गरिदेओस् । त्यो संसारमा पनि अपमानित हुनेछ तथा क़ेयामत (प्रलय) का दिन पनि हामी त्यसलाई नरकमा पोलिनेको प्रकोप चखाउनेछौं ।

ذٰلِكَ بِمَا قَدَّمَتْ يَدٰكَ وَاَنَّ اللّٰهَ لَيْسَ بِظَلَّامٍ لِّلْعَبِيْدِ ۝١٠

(१०) यो ती कर्महरूका कारण जुन तिम्रा हातले अगाडी पठाएका थिए । विश्वास गर कि अल्लाह (तआला) आफ्ना भक्तहरूमाथि अत्याचार गर्नेवाला छैन ।

وَمِنَ النَّاسِ مَنْ يَّعْبُدُ اللّٰهَ عَلٰى حَرْفٍ ۚ فَاِنْ اَصَابَهٗ خَيْرُ ۨاطْمَاَنَّ بِهٖ ۚ وَاِنْ اَصَابَتْهُ فِتْنَةُ ۨانْقَلَبَ عَلٰى وَجْهِهٖ ۚ خَسِرَ

(११) तथा केही मानिस यस्ता पनि छन् कि एक तटमा भई अल्लाहको इबादत (उपासना) गर्दछन् । यदि कुनै लाभ प्राप्त हुन्छ भने आकर्षित हुन्छन् तथा यदि कुनै दुख आइपुग्यो भने त्यसैबेला विमुख हुन्छन् ।[2] उनीहरूले

[1] ثَانِيَ कर्ताको रूपमा छ, मोड्नेवाला । عطفٌ को अर्थ 'पहलू' (कोल्टो) हो, يجادل बाट 'हाल' हो । यसमा त्यस व्यक्तिको स्थिति वर्णन गरिएको छ जो बिना बौद्धिक तथा प्रमाणिक तर्क अल्लाहको विषयमा विवाद गर्दछ कि त्यो अभिमानी तथा विमुख भई अट्टेरीपना गर्दै हिंड्छ, जस्तो अन्य स्थानमा त्यसको स्थितिलाई यी शब्दहरूमा वर्णन गरिएको छ ﴿وَلّٰى مُسْتَكْبِرًا كَاَنْ لَّمْ يَسْمَعْهَا﴾ (सूर: लुकमान-७) ﴿لَوَّوْا رُءُوْسَهُمْ﴾ (सूर: अल-मुनाफ़िकून-५) ﴿اَعْرَضَ وَنَاٰ بِجَانِبِهٖ﴾ (सूर: बनी इस्राईल-८३)

[2] حــرف को अर्थ हो तट । यी तटहरूमा उभिनेवाला स्थिर हुँदैन अर्थात् त्यसलाई शान्ति एवं स्थायित्व हुँदैन । त्यसैप्रकार जो व्यक्ति धर्मका विषयमा संशय एवं सन्देहको शिकार रहन्छ, त्यसको पनि स्थिति यसैप्रकार हुन्छ, त्यसलाई धर्ममा स्थिरता प्राप्त हुँदैन, त्यसको उद्देश्य मात्र सांसारिक लाभ हुन्छ यदि प्राप्त भइराखे भने ठीक छ, अन्यथा त्यो पुन: आफ्नो पैतृक धर्म अर्थात् कुफ्र तथा शिर्कतिर फर्किहाल्छ । यसका विपरीत जो सच्चा मुसलमान हुन्छन् तथा ईमान तथा विश्वासिलो परिपूर्ण हुन्छन्, उनी عسر و يسر देखे बिना धर्ममा दृढ रहन्छन्, यदि अनुकम्पाहरू प्राप्त हुन्छन् भने कृतज्ञता व्यक्त गर्दछन् तथा यदि कष्टहरुबाट

الدُّنْيَا وَالْاٰخِرَةَ ۭ ذٰلِكَ هُوَ الْخُسْرَانُ الْمُبِيْنُ ⑪

दुबै लोकको हानि भोगे । वास्तवमा यो स्पष्ट हानि हो ।

يَدْعُوْا مِنْ دُوْنِ اللّٰهِ مَا لَا يَضُرُّهٗ وَمَا لَا يَنْفَعُهٗ ۭ ذٰلِكَ هُوَ الضَّلٰلُ الْبَعِيْدُ ⑫

(१२) उनी अल्लाहका अतिरिक्त तिनीहरूलाई पुकार्दछन्, जो न हानि पुऱ्याउन सक्छन् न लाभ । यही त दुरस्थको मार्ग-विचलन हो ।

يَدْعُوْا لَمَنْ ضَرُّهٗٓ اَقْرَبُ مِنْ نَّفْعِهٖ ۭ لَبِئْسَ الْمَوْلٰى وَلَبِئْسَ الْعَشِيْرُ ⑬

(१३) त्यसलाई पुकार्दछन् जसको हानि त्यसको लाभदेखि निकट छ, नि:सन्देह नराम्रा संरक्षक हुन् तथा नराम्रा मित्र ।[1]

पीडित हुन्छन् भने धैर्य एवं सहन गर्दछन् । यसको अवतरित हुनका कारणमा एउटा सशंकित व्यक्तिको घटना पनि यसैप्रकार वर्णन गरिएको छ । (सहीह बुख़ारी तफ़सीर सूरतुल हज्ज) कि एक व्यक्ति मदीना आउँथ्यो, यदि त्यसकहाँ बच्चा हुन्थे एवं त्यसैप्रकार जनावरहरूमा अधिकता हुन्थ्यो, यो धर्म राम्रो छ, यदि यस्तो हुन्नथ्यो भने भन्थ्यो, यो धर्म नराम्रो छ । केही कथनहरूमा यी गुण नयाँ ग्रामीण मुसलमानहरूको वर्णन गरिएको छ । (फ़तहुल बारी)

[1]केही व्याख्याकारहरूका निकट يدعو भन्नेको अर्थमा छ । अर्थात अल्लाहको अतिरिक्त अन्यको पूजा गर्नेवाला कयामतका दिन भन्नेछन् कि जसको हानि, त्यसको लाभदेखि निकटतम छ, त्यो संरक्षक तथा मित्र नि:सन्देह नराम्रो छ अर्थात आफ्ना देवताहरूका विषयमा यो भन्नेछ किनकि त्यहाँ त्यसका आशाका महल भत्कनेछन् तथा यी देवता जसका विषयमा त्यसको विचार थियो कि उनीहरू अल्लाहका यातनाबाट त्यसलाई बचाउनेछन्, त्यसको सिफारिश गर्नेछन्, त्यहाँ स्वयं ती देवता पनि त्यसका साथ नरकमा इन्धन हुनेछन् । مولى को अर्थ स्वामी तथा सहायता गर्नेवाला तथा عشير को अर्थ साथमा रहनेवाला, साथी तथा निकटवर्ती हो । सहायता गर्नेवाला तथा साथी त्यो हुन्छ जो दुखका अवसरमा काम आउँछ, परन्तु यी देवता स्वयं यातनाका पकडमा हुनेछन्, यिनी कसैको के काम आउँछन् ? यसकारण यिनलाई नराम्रो संरक्षक तथा नराम्रो साथी भनिएको छ । यिनको पूजा हानिमात्र छ, लाभको त यसमा कुनै अंश नै छैन अनि यो जुन भनिएको छ कि उनको हानि, उनका लाभसित निकटतम छ, त यो यसप्रकार छ जस्तै अन्य स्थानमा भनिएको छ ।

﴿وَإِنَّآ أَوْ إِيَّاكُمْ لَعَلَىٰ هُدًى أَوْ فِي ضَلَٰلٍ مُّبِينٍ﴾

"नि:सन्देह हामी (अर्थात् अल्लाहलाई मान्नेवाला) अथवा तिमी (त्यसलाई अस्वीकार गर्नेवाला) सत्यमार्गमा छौं अथवा खुल्ला मार्ग-विचलनमा ।" (सूर: सबा-२४)

إِنَّ اللَّهَ يُدْخِلُ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ ۚ إِنَّ اللَّهَ يَفْعَلُ مَا يُرِيدُ ﴿١٤﴾

(१४) निःसन्देह ईमान तथा सत्कर्म गर्नेवालाहरूलाई अल्लाह तआ़ला तरङ्ग उर्लिराखेका नहरहरू भएका स्वर्गमा लग्नेछ । अल्लाह निश्चय गर्दछ त्यसलाई गरेर छाड्छ ।

مَن كَانَ يَظُنُّ أَن لَّن يَنصُرَهُ اللَّهُ فِي الدُّنْيَا وَالْآخِرَةِ فَلْيَمْدُدْ بِسَبَبٍ إِلَى السَّمَاءِ ثُمَّ لْيَقْطَعْ فَلْيَنظُرْ هَلْ يُذْهِبَنَّ كَيْدُهُ مَا يَغِيظُ ﴿١٥﴾

(१५) जसको यो विचार छ कि अल्लाह (तआ़ला) आफ्ना रसूलको सहायता दुबै लोकमा गर्ने छैन, त्यो अग्लो ठाउँमा एउटा डोरी बाँधेर (आफ्नो घाँटीमा पासो लगाइहालोस्) र फेरि घाँटी अठ्याओस् अनि हेरोस् कि त्यसको चतुरताबाट त्यो कुरा हटेर जान्छ, जुन उसलाई तड्पाइराखेको छ ।[1]

وَكَذَٰلِكَ أَنزَلْنَاهُ آيَاتٍ بَيِّنَاتٍ وَأَنَّ اللَّهَ يَهْدِي مَن يُرِيدُ ﴿١٦﴾

(१६) तथा हामीले यसैप्रकार यस कुर्आनलाई स्पष्ट आयतहरूमा अवतरित गर्‍यौं । तथा जसलाई अल्लाह चाहन्छ मार्गदर्शन प्रदान गर्दछ ।

---

स्पष्ट कुरो यो हो कि सत्यमार्गमा तिनीहरू नै छन्, जो अल्लाहलाई मान्नेवाला छन् । परन्तु त्यसलाई स्पष्ट शव्दहरूमा भन्नुको सट्टा संकेत तथा प्रश्नात्मक वाक्यहरूमा वर्णन गरिएको छ, जुन सुन्नेवालालाई अधिक प्रभावी तथा शैलीपूर्ण लाग्दछ । अथवा यसको सम्बन्ध संसारसित छ तथा अर्थ यो हुनेछ कि अल्लाहका अतिरिक्त अन्यलाई गुहार्नाले तुरुन्त हानि यो भयो कि ईमानबाट बञ्चित भयो, यो निकटतम हानि हो । तथा आख़िरतमा त त्यसको हानि निश्चित नै छ ।

[1]यसको एउटा अर्थ त यो गरिएको छ कि यस्तो व्यक्ति जो यो चाहन्छ कि अल्लाह तआ़ला आफ्नो पैग़म्बरहरूको सहायता नगरोस्, किनभने त्यसका प्रभाव तथा विजयबाट त्यसलाई हार्दिक दुख हुन्छ, त त्यो आफ्नो घरको छतमा डोरी झुण्ड्याएर तथा आफ्नो घाँटीमा त्यसको पासो लगाएर झुण्डि आत्महत्या गरिहालोस्, शायद यो आत्महत्या त्यसलाई क्रोधबाट बचाइहालोस्, जुन त्यो मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमका बृद्धि हुँदै गएका प्रभाव क्षेत्रलाई देखेर आफ्नो हृदयमा पाउँछ । यस स्थितिमा घरको छत हुनेछ । अन्य अर्थ यो हो कि त्यो एउटा डोरी लिएर आकाशमा चढोस् तथा आकाशहरूबाट जुन प्रकाशना तथा सहायता आउँछ, त्यसको क्रम समाप्त गरिदेओस् (यदि त्यो गर्न सक्दछ) तथा देखोस् कि के त्यसको हृदयलाई शान्ति प्राप्त भयो ? इमाम इब्ने क़सीरले प्रथम भावार्थलाई तथा इमाम शौकानीले द्वितीय भावार्थलाई अधिक प्रिय ठानेका छन् तथा वाक्यक्रमले यो द्वितीय भावार्थले अधिक निकट आउँछ ।

إِنَّ الَّذِينَ آمَنُوا وَالَّذِينَ هَادُوا وَالصَّابِئِينَ وَالنَّصَارَىٰ وَالْمَجُوسَ وَالَّذِينَ أَشْرَكُوا إِنَّ اللَّهَ يَفْصِلُ بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ ۚ إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدٌ ﴿١٧﴾

(१७) ईमानवाला तथा यहूदी एवं विधर्मी तथा इसाई एवं अग्निपूजक[1] तथा मूर्तिपूजक[2] ती सबैका मध्ये क़ेयामतका दिन अल्लाह (तआ़ला) स्वयं निर्णय गरिदिनेछ ।[3] अल्लाह (तआ़ला) प्रत्येक कुरोको साक्षी छ ।[4]

أَلَمْ تَرَ أَنَّ اللَّهَ يَسْجُدُ لَهُ مَن فِي السَّمَاوَاتِ وَمَن فِي الْأَرْضِ وَالشَّمْسُ وَالْقَمَرُ وَالنُّجُومُ

(१८) के तिमी देखिराखेका छैनौं कि अल्लाहका समक्ष नत्मस्तक छन् सबै आकाशवाला तथा धर्तीवाला एवं सूर्य तथा चन्द्रमा एवं ताराहरू तथा पर्वत एवं वृक्ष तथा जीव[5] तथा धेरै

[1] مجوس सित तात्पर्य ईरानका अग्निपूजक हुन् जो दुई देवताहरूमा विश्वास राख्दछन् । एउटा अन्धकार उत्पन्न गर्नेवाला छ, दोस्रो प्रकाशलाई जसलाई उनीहरूले अहरमन एवं यज़्दाँ भन्दछन् ।

[2] यिनीहरूमा वर्णित विचलित सम्प्रदायहरूका अतिरिक्त जति पनि अल्लाहका साझेदार बनाउने पाप गर्नेवाला छन्, सबै आइहाले ।

[3] यिनीहरूमध्ये सत्यमा को छ, असत्यमा को छ ? यो त ती प्रमाणहरूबाट सिद्ध हुन्छ जुन अल्लाहले आफ्नो क़ुरआनमा अवतरित गरेको छ तथा आफ्नो अन्तिम पैग़म्बरलाई पनि यसै उद्देश्यका पूर्तिका लागि पठाएको थियो ﴿لِيُظْهِرَهُ عَلَى الدِّينِ كُلِّهِ﴾ (सूर: अल-फ़तह-२८) यहाँ निर्णयसित तात्पर्य त्यो दण्ड हुन् जुन अल्लाह तआ़ला क़यामतका दिन असत्यका पूजारीहरूलाई दिनेछ । यस दण्डबाट पनि स्पष्ट हुनेछ कि संसारमा असत्यमा को थियो र सत्यमा को ?

[4] यो निर्णय मात्र निर्णायक अधिकारको शक्तिको कारण हुनेछैन बरु न्यायको आधारमा हुनेछ, किनभने त्यो सबै कुरो राम्ररी जान्दछ, त्यसलाई प्रत्येक कुरोको ज्ञान छ ।

[5] त्यही व्याख्याकारहरूले यी सज्दाहरू (ढोग) बाट ती सबै वस्तुलाई अल्लाहका आदेशका अधीन हुनु अर्थ लिएका छन्, कसैमा शक्ति छैन कि त्यो अल्लाहका आदेशको अवहेलना गर्न सकोस् । उनका निकट सज्दा यहाँ उपासना एवं इबादत (वन्दना) को अर्थमा होइन जुन केवल बुद्धिवाला जीवितहरुका लागि विशेष छ । जबकि केही व्याख्याकारले यसलाई काल्पनिकको सट्टा वास्तविक अर्थमा लिएका छन् कि प्रत्येक सृष्टि आ-आफ्ना रुपले अल्लाहका समक्ष सज्दा गरिराखेका छन् । जस्तै من في السماوات बाट तात्पर्य फरिश्ताहरु हुन् و من في الارض सित प्रत्येक प्रकारका जीवधारी, मनुष्य, जिन्नात, पशु तथा पंक्षी एवं अन्य वस्तुहरू हुन् । यी सबै आ-आफ्नो शैलीमा सज्दा एवं अल्लाहको तस्बीह (स्तुति) गर्दछन् । ﴿وَإِن مِّن شَيْءٍ إِلَّا يُسَبِّحُ بِحَمْدِهِ﴾ (सूर: बनी इस्राईल-४४) सूर्य, चन्द्रमा तथा ताराहरूको विशेषरूपले यसकारण वर्णन

وَالْجِبَالُ وَالشَّجَرُ وَالدَّوَآبُّ وَكَثِيرٌ مِّنَ النَّاسِ ۖ وَكَثِيرٌ حَقَّ عَلَيْهِ الْعَذَابُ ۗ وَمَن يُهِنِ اللَّهُ فَمَا لَهُ مِن مُّكْرِمٍ ۚ إِنَّ اللَّهَ يَفْعَلُ مَا يَشَاءُ ۩ ⑱



هَٰذَانِ خَصْمَانِ اخْتَصَمُوا فِي رَبِّهِمْ

तथा मनुष्य पनि हो ।[1] धेरैजसो तिनी पनि छन् जसमाथि यातना सिद्ध भइसकेको छ,[2] तथा जसलाई प्रभुले अपमानित गर्दछ, त्यसलाई कोही सम्मान दिनेवाला छैन,[3] अल्लाह जे चाहन्छ गर्दछ ।

(१९) यी दुबै आफ्ना प्रभुका विषयमा मतभेद राख्नेवाला हुन्,[4] तथा काफ़िरहरूका लागि अग्निका

गरिएको छ कि मूर्तिपूजक यिनको पूजा गरिराखेका छन् । अल्लाह तआलाको वर्णन गरेको छ, तिमी उनलाई टाउको टेक्दछौ, उनी त अल्लाहको समक्ष सजदा ढोग तथा दण्डवत गर्नेवाला तथा त्यसका अधीन छन्, यसकारण तिमी उनको सजदा नगर, त्यस अस्तित्वलाई सज्दा गर जो उनका स्रष्टा छ । (हा.मीम.सजदा-३७) सहीह हदीसमा छ, आदरणीय अबूज़रको कथन छ मसित रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले सोध्नुभयो, के जान्दछौ कि सूर्य कहाँ जान्छ ? मैले भने अल्लाह तथा त्यसका रसूल उचितरुपले जान्दछन् । भन्नुभयो सूर्य जान्छ तथा अर्शमुनि नत्मस्तक हुन्छ, अनि उसलाई (उदय हुने) आदेश दिईन्छ । एक समय आउनेछ कि उसलाई भनिनेछ फर्केर जाउ अर्थात् जहाँबाट आएका छौ त्यहीं गईहाल । (सहीह बुखारी बदउल ख़ल्क बाब सिफ़तिश्शम्स वल कमरे बेहुसबान तथा मुस्लिम किताबुल ईमान बाब बयानुज्ज़मनि अल्लजी ला युक़बल फ़ीहिल ईमान) यसैप्रकार एक सहावीको घटनाको वर्णन हदीसमा छ कि उनले स्वप्नमा आफ्नो साथ वृक्षलाई सजदा (ढोग) गरिराखेका देखे । तिर्मिजी अबवाबुस्सफ़रे, बाब माजाअ मायकूल फ़ी सजूदिल कुर्आन तोहफ़तुल अहवाज़ी भाग १, पृष्ठ ४०२, इब्ने माजा संख्या १०५३) तथा पर्वत एवं वृक्षहरूको सजदामा उनका छायाँमा दायाँ-बायाँ हुनु अथवा झुक्नु पनि सम्मिलित छ, जसतिर संकेत सूर: रअद-१५ तथा सूर: अल-नहल-४८ तथा ४९ मा पनि गरिएको छ ।

[1]यो सज्दा अधीनता एवं इबादत नै हो जसलाई मनुष्यको एउटा ठूलो संख्या गर्दछ तथा अल्लाहको प्रसन्नता प्राप्त गर्ने अधिकारी बन्दछ ।

[2]यी त्यस्ता हुन् जो अधीनताका सजदा अस्वीकार गरी कुफ्रका मार्ग अपनाउँछन् वरु प्राकृतिक नियमहरू अर्थात् पराधीनताका सजदामा त उनीहरूलाई पनि इन्कारको शक्ति छैन कि अस्वीकार गरुन् ।

[3]कुफ्रलाई धारण गर्नुको परिणाम अपमान तथा अनादर तथा आख़िरतमा स्थाई यातना छ, जसबाट बचेर काफ़िरहरूलाई मान दिनेवाला कोही हुनेछैन ।

[4]﴿هَٰذَانِ خَصْمَانِ﴾ यी दुबै वचन हुन् । केहीले यसबाट तात्पर्य उपरोक्त पथभ्रष्ट सम्प्रदाय तथा त्यसका विपक्ष दोस्रो समुदाय मुस्लिम लिएका छन् । यी दुबै आफ्नो प्रभुका विषयमा विवाद गर्दछन् मुसलमान त उसको एक हुने तथा त्यसको

فَالَّذِيْنَ كَفَرُوْا قُطِّعَتْ لَهُمْ ثِيَابٌ مِّنْ نَّارٍ ؕ يُصَبُّ مِنْ فَوْقِ رُءُوْسِهِمُ الْحَمِيْمُ ﴿١٩﴾

वस्त्र नापेर काटिनेछन् तथा उनका टाउका माथिबाट तातो पानीको धारा बगाइने छन् ।

يُصْهَرُ بِهٖ مَا فِيْ بُطُوْنِهِمْ وَالْجُلُوْدُ ﴿٢٠﴾

(२०) जसबाट उनका पेटका सबैकुरा तथा छाला पगालिनेछन् ।

وَلَهُمْ مَّقَامِعُ مِنْ حَدِيْدٍ ﴿٢١﴾

(२१) तथा उनका दण्डका लागि फलामका हथौडा छन् ।

كُلَّمَآ اَرَادُوْٓا اَنْ يَّخْرُجُوْا مِنْهَا مِنْ غَمٍّ اُعِيْدُوْا فِيْهَا ق وَذُوْقُوْا عَذَابَ الْحَرِيْقِ ﴿٢٢﴾

(२२) यिनी जतिखेर पनि त्यहाँदेखि दुखले निस्कि भाग्ने चेष्टा गर्नेछन्, त्यहीं फर्काइनेछ तथा (भनिनेछ) पोलिनुको यातनाको स्वाद चाख ।[1]

اِنَّ اللّٰهَ يُدْخِلُ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ يُحَلَّوْنَ فِيْهَا مِنْ اَسَاوِرَ مِنْ ذَهَبٍ وَّلُؤْلُؤًا ؕ وَلِبَاسُهُمْ فِيْهَا حَرِيْرٌ ﴿٢٣﴾

(२३) निःसन्देह ईमानवाला तथा सत्कर्म गर्नेहरूलाई अल्लाह (तआला) ती स्वर्गमा लैजानेछ जसका तलबाट नहरहरू उर्लिराखेका छन् । जहाँ उनीहरूलाई स्वर्गका कंगन पहिराइनेछन् तथा सच्चा मोती पनि त्यहाँ उनका वस्त्र शुद्ध रेशमका हुनेछन् ।[2]

पूनर्जीवित गर्ने सामर्थ्यको पक्षमा छन्, जबकि अन्य अल्लाहका विषयमा विभिन्न विचलनमा परेका छन् । यस सम्बन्धमा बद्रका युद्धमा लड्नेवाला मुसलमान तथा काफ़िर पनि आउँछन् जसमा एकातिर आदरणीय हमज़ा, आदरणीय अली तथा आदरणीय उबैदा थिए र अर्कोतिर उनका विपक्षी काफ़िरहरूमध्ये उत्बा, शैबा तथा वलीद बिन उत्बा थिए । (सहीह बुख़ारी तफ़सीर सूरतिल हज्ज) इमाम इब्ने क़सीर भन्दछन् कि यी दुवै भावार्थ ठीक एवं आयतका अनुसार छन् ।

[1]यसमा नरकमा जानेहरूको यातनाको केही विस्तृत वर्णन गरिएको छ, जुन उनीहरूले भोग्नुपर्नेछ ।

[2]नरकवासीहरूको अपेक्षामा यो स्वर्गवासीहरूको तथा ती सुखहरूको वर्णन हो जुन ईमानवालाहरूलाई उपलब्ध गराइने छन् ।

وَهُدُوْٓا اِلَى الطَّيِّبِ مِنَ الْقَوْلِ ۚ وَهُدُوْٓا اِلٰى صِرَاطِ الْحَمِيْدِ ﴿٢٤﴾

(२४) तथा उनीहरूलाई पवित्र वचनको मार्ग देखाइयो ।[1] तथा अति प्रशंसित (अल्लाहका) मार्गदर्शन दिइयो ।[2]

اِنَّ الَّذِيْنَ كَفَرُوْا وَيَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ وَالْمَسْجِدِ الْحَرَامِ الَّذِيْ جَعَلْنٰهُ لِلنَّاسِ سَوَآءَ ۨ الْعَاكِفُ فِيْهِ وَالْبَادِ ۗ وَمَنْ يُّرِدْ فِيْهِ بِاِلْحَادٍۢ بِظُلْمٍ

(२५) जुन मानिसले कुफ्र गरे तथा अल्लाहका मार्गबाट रोक्नथाले तथा त्यो सम्मानित मस्जिदबाट पनि[3] जसले हामीले सबै मानिसका लागि समान गरिदिएका छौं, त्यहींका हुन् अथवा बाहिरका हुन्,[4] जसले पनि अत्याचारका साथ त्यहाँ

[1]अर्थात् स्वर्ग यस्तो स्थान हो जहाँ पवित्र कुरा हुनेछन्, त्यहाँ व्यर्थ एवं पापका कुरा हुनेछैन ।

[2]अर्थात् यस्ता स्थानतिर जहाँ अल्लाहको प्रशंसा तथा महिमाको ध्वनि गुञ्जित भइरहेको हुनेछ । यदि यसको सम्बन्ध संसारसित छ भने अर्थ कुर्आन तथा इस्लामतिर मार्गदर्शन हो जुन ईमानवालाहरूको भागमा आउँछ ।

[3]रोक्नेवालाहरूबाट तात्पर्य मक्काका काफिर हुन्, जसले ६ हिज्रीमा मुसलमानहरूलाई मक्का गई 'उमरह' गर्नबाट रोकिदिएका थिए । मुसलमानहरूलाई हुदैबिया नामक स्थानबाट फिर्ता आउनुपरेको थियो ।

[4]यसमा मतभेद छ कि मस्जिदे-हराम (सम्मानवाली मस्जिद) बाट तात्पर्य विशेषरुपले मस्जिद (खानये काअबा) नै हो अथवा सम्पूर्ण हरम मक्का किनभने कुर्आनमा केही स्थानमा सम्पूर्ण हरमे मक्काको लागि पनि मस्जिदे हरामको शब्द प्रयोग भएको छ, अर्थात अंश भनेर सम्पूर्णको अर्थ लिएको छ । जहाँसम्म विशेष मस्जिदे हरामको सम्बन्ध छ, त्यसको विषयमा त यस कुरामा सहमति छ कि यसमा निवासी स्वदेशी अथवा विदेशी सबैको भाग समान छ अर्थात कुनै भेदभाव नगरिकन प्रत्येक व्यक्ति रात-दिनका कुनै भागमा इबादत (पूजा) गर्नसक्दछ, कसैका लागि पनि कुनै मुसलमानलाई इबादतबाट रोक्नुको आज्ञा छैन । परन्तु जुन धर्मगुरुहरूले मस्जिदे हरामबाट तात्पर्य सम्पूर्ण हरम लिएका छन् उनको एउटा गुटको विचार यो छ कि मक्काको पूरा हरम सबै मुसलमानहरूका लागि समान छ तथा त्यसका मकानहरू तथा धर्तीको कोही स्वामी छैन यसकारण उनका निकट तिनका क्रय-विक्रय अथवा भाडामा दिनु उचित छैन । जुन व्यक्ति पनि कुनै स्थानबाट हज्ज अथवा उमरहको लागि मक्का जान्छ भने उसलाई यो अधिकार छ कि त्यो जहाँ चाहन्छ ठहरोस्, त्यहाँ बस्नेवालाहरूको कर्तब्य हो कि उनी तिनीहरूलाई आफ्ना घरहरूमा बस्नबाट कसैलाई मनाही नगरुन् । दोस्रो विचार यो छ कि मकान तथा धर्ती कुनै विशेष व्यक्तिका स्वामित्वको

نُذِقْهُ مِنْ عَذَابٍ أَلِيمٍ ﴿٢٥﴾

विपथ हुने विचार गर्नेछ[1] हामी त्यसलाई कष्टदायी यातनाको स्वाद चखाउनेछौं ।[2]

وَإِذْ بَوَّأْنَا لِإِبْرَاهِيمَ مَكَانَ الْبَيْتِ أَنْ لَا تُشْرِكْ بِي شَيْئًا

(२६) तथा जबकि हामीले इब्राहीमका लागि काअबा घरको स्थान निर्धारण गरिदियौं[3] (यस प्रतिबन्धका साथ) कि मसँग कसैलाई

वस्तु हुनसक्छन् तथा तिनका स्वामित्वको अधिकार अर्थात् क्रय-विक्रय तथा भाडामा दिनु उचित छ । परन्तु ती स्थान जसका सम्बन्ध हज्जका कार्यक्रम पूरा गर्नुसित छ जस्तै मिना, मुज्दलिफ़ा, अरफ़ातको मैदान यी जनसामान्यका लागि दान हुन् । यिनमा कसैको स्वामित्व मान्य छैन । यो समस्या प्राचीन धर्मगुरुहरू बीच अत्याधिक मतभेदको कारण बन्दै आइरहेको छ । परन्तु अचेल लगभग सबै धर्मगुरु विशेष स्वामित्वका पक्षमा भइसकेका छन् । तथा यसमा कुनै मतभेद रहेको छैन । मौलाना मुफ्ती मुहम्मद शफ़ी मरहूमले पनि इमाम अबू हनीफ़ा तथा धर्माचार्यहरूलाई यसैका पक्षधर भन्नुभएको छ । (हेर्नुस् मआरिफुल कुर्आन भाग ६, पृष्ठ २५३)

[1]إِلْحَاد को शाब्दिक अर्थ त विपथ हुनु हो । यहाँ यो सामान्य छ कुफ्रदेखि शिर्क लिएर हरप्रकारका पापका लागि । यहाँसम्मकि केही धर्मगुरुहरू कुर्आनी शब्दहरूका आधारमा यस कुरालाई विश्वास गर्दछन् कि हरममा यदि कुनै प्रकारका पापको योजना बनाउने छ (चाहे त्यसलाई कार्यन्वयन गरोस् अथवा नगरोस्) त त्यो पनि यस चेतावनीमा सम्मिलित छ । केहीको भनाई छ कि मात्र विचारका कारण पकड हुनेछैन, जस्तो कि कुर्आनका अन्य शब्दहरूबाट ज्ञात हुन्छ । परन्तु यदि निश्चय गरिसकिएको छ भने पकड हुनसक्छ । (फ़तहुल क़दीर)

[2]यो प्रतिफल हो उनीहरूको जो उपरोक्त पाप गर्नेछन् ।

[3]अर्थात वैतुल्लाह (अल्लाहको घर) को स्थान भनिदियो तथा त्यहाँ इब्राहीमका सन्तानलाई बसाइदियो । यसबाट ज्ञात हुन्छ कि तूफान नूहका विनाशका पश्चात खानये काअबाको निर्माण सर्वप्रथम आदरणीय इब्राहीमका हातबाट भयो । जस्तो कि सहीह हदीसबाट यो कुरो सिद्ध छ, जस्तै नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो: "सर्वप्रथम जुन मस्जिद धर्तीमा बनाइयो, मस्जिदे हराम हो तथा त्यसको चालीस वर्ष पश्चात मस्जिदे अक्साको निर्माण भयो ।" (मुसनद अहमद भाग ५ पृष्ठ १५० तथा १६६ देखि १६७ सम्म तथा सहीह मुस्लिम किताबुल मसाजिद)

وَّطَهِّرۡ بَيۡتِيَ لِلطَّآئِفِيۡنَ وَالۡقَآئِمِيۡنَ وَالرُّكَّعِ السُّجُوۡدِ ﴿٢٦﴾

सम्मिलित नगर्नु[1] तथा मेरो घरको परिक्रमा गर्नु, उभिने, निहुरिने (रूकुअ) तथा सजदा गर्नेवालाहरूका लागि शुद्ध पवित्र राख्नु ।[2]

وَاَذِّنۡ فِى النَّاسِ بِالۡحَجِّ يَاۡتُوۡكَ رِجَالًا وَّعَلٰى كُلِّ ضَامِرٍ يَّاۡتِيۡنَ مِنۡ كُلِّ فَجٍّ عَمِيۡقٍ ﴿٢٧﴾

(२७) तथा मानिसहरूमा हज्जको घोषणा गरिदेउ, मानिसहरू तिम्रो पासमा पैदल पनि आउने छन् तथा दुब्ला-पातला उँटहरूमाथि पनि[3] दूरस्थका सबै मार्गहरूबाट आउने छन् ।[4]

لِّيَشۡهَدُوۡا مَنَافِعَ لَهُمۡ وَيَذۡكُرُوا اسۡمَ اللّٰهِ فِىۡۤ اَيَّامٍ مَّعۡلُوۡمٰتٍ عَلٰى مَا رَزَقَهُمۡ مِّنۡۢ بَهِيۡمَةِ

(२८) आफ्नो लाभ प्राप्त गर्नका निम्ति आऊन्[5] तथा ती निर्धारित दिनहरूमा अल्लाहका नामलाई स्मरण गरून् ती चौपायाहरूमाथि जुन पाल्तु (पालिएका)



[1]यो ख़ानये काअबाका निर्माणको उद्देश्य वर्णन गरिएको छ कि यसमा केवल मेरो इबादत (उपासना) गरियोस्, यसबाट यो भन्नुको उद्देश्य हो कि मूर्तिपूजकहरूले यसमा जुन मूर्तिहरू सजाएर राखेका छन्, जसका उनी यहाँ आएर पूजा गर्दछन् यो खुला अत्याचार हो कि जहाँ मात्र अल्लाहको इबादत गर्नुपर्दथ्यो, त्यहाँ मूर्तिहरूको पूजा गरिन्छ ।

[2]कुफ्र, मूर्तिपूजा तथा अन्य अशुद्धता एवं अपवित्रताबाट । वर्णन केवल नमाज़ पढ्नेवाला तथा परिक्रमा गर्नेवालाहरूको गरेको छ, किनकि यी दुबै इबादत ख़ानये काअबाको लागि विशेषरुपले हुन्, नमाज़मा मुख त्यसैतिर हुन्छ तथा परिक्रमा केवल उसैका चारैतिर गरिन्छ परन्तु विदअतिहरूले अब धेरैजसो कब्रहरूको परिक्रमा पनि अपनाइसकेका छन् तथा केही नमाज़हरूका लागि पनि क़िबला कुनै अन्य ।

[3]जो स्याउलाको कमी तथा यात्राको दूरी तथा थकावटबाट क्षीण भइहाल्ने छन् ।

[4]यो अल्लाह तआ़लाको शक्ति हो कि मक्काको पर्वतको चुचुरोबाट गुञ्जायमान हुने यो क्षीणजस्तो उद्घोषणा संसारका कुना-काप्चासम्म पुगिहाल्यो, जसको दर्शन हज्ज तथा उमरहमा प्रत्येक हाजी तथा उमरह गर्नेवाला गर्दछ ।

[5]यो धार्मिक लाभ हो कि नमाज़, परिक्रमा तथा हज्ज तथा उमरहका कर्महरूद्वारा अल्लाहका क्षमा तथा प्रसन्नता प्राप्त गरियोस् । तथा सांसारिक व्यापार तथा धन्धा पनि गरेर धन-सामग्री प्राप्त गरियोस् ।

الْأَنْعَامِ ۚ فَكُلُوا مِنْهَا وَأَطْعِمُوا الْبَائِسَ الْفَقِيرَ ﴿٢٨﴾

छन्,[1] त तिमी स्वयं पनि खाउ तथा भोका भिक्षुहरूलाई पनि खुवाउ ।

ثُمَّ لْيَقْضُوا تَفَثَهُمْ وَلْيُوفُوا نُذُورَهُمْ وَلْيَطَّوَّفُوا بِالْبَيْتِ الْعَتِيقِ ﴿٢٩﴾

(२९) अनि उनी आफ्ना फोहोर-मैला समाप्त गरून्[2] तथा आफ्ना मन्नत (इच्छाको कुरा) पूरा गरून्[3] तथा अल्लाहका प्राचीन घरको परिक्रमा गरून् ।[4]

ذَٰلِكَ وَمَن يُعَظِّمْ حُرُمَاتِ

(३०) यो हो तथा जो अल्लाहका निषेधाज्ञा

---

بهيمة الأنعام[1] (पालिएका पशु) बाट तात्पर्य ऊँट, गाई तथा बाख्रा (एवं भेंडा तथा च्याङ्ग्राहरू (दुम्बा) हुन् । तिनीमाथि अल्लाहको नाम लिनुबाट अर्थ हो उनलाई वध गर्नु, जुन अल्लाहको नाम लिएर नै गरिन्छ । तथा ايام معلومات बाट तात्पर्य बलि दिवस أيام تشريق हुन् जुन १० जिलहिज्जा तथा तीन दिन त्यसका पश्चात अर्थात ११, १२, तथा १३ जिलहिज्जासम्म जसमा कुर्बानी (बलि) दिन सकिन्छ । यसमध्ये १० ज़िलहिज्जालाई "यौमुन्नहर" र त्यस पश्चात ११ देखि १३ सम्मलाई अय्यामे तश्रीक भनिन्छ । सामान्यरुपले ايام معلومات बाट तात्पर्य जिलहिज्ज़ाका दस दिन तथा أيام معدودات बाट ११, १२ तथा १३ जिलहिज्जा लिइन्छन् । तैपनि यहाँ معلومات जुन अर्थहरूमा आएको छ, त्यसबाट यही ज्ञात हुन्छ कि यहाँ १०-१३ जिलहिज्ज़ा तात्पर्य छ । والله أعلم

[2]अर्थात् १० जिलहिज्ज़ामा ठूलो जमरालाई कंकरिहरू मार्नुका पश्चात पुरै कपाल कटाएर अथवा सानो पारेर एहराम खोलिन्छ तथा पत्नीसँग सहवास गर्नका अतिरिक्त ती सबै कार्य उसका लागि उचित हुन्छन् जुन एहरामको अवस्थामा निषेधित थिए । फोहरमैलो समाप्त गर्नुको अर्थ यही हो कि उनी कपाल तथा नङहरू आदिलाई सफा गरिहालून्, तेल सुगन्ध प्रयोग गरून् तथा सिइएको वस्त्र धारण गर्नु आदि ।

[3]यदि कुनै मनौती (भाकल) भएको छ, जस्तो कि मानिसहरू भाकल गर्छन् कि यदि अल्लाहले त्यस पवित्र घरको दर्शनको शुभ अवसर दिइयो भने अमूक पुण्यका काम गर्नेछौं ।

[4]अतीकको अर्थ हो प्राचीन, तात्पर्य ख़ानये काअबा हो कि पूरा कपाल खौरने अथवा सानो पारे पश्चात طواف إفاضة (ख़ानये काअबाको परिक्रमा गरून्) जसलाई "दर्शनको परिक्रमा" पनि भन्दछन्, तथा यो हज्ज़को स्तम्भ हो, जुन अरफ़ातमा तथा मुज़दलिफ़ामा रोकिएर जमरः कुब्रा (ठूलो शैतान) को स्थानमा ढुङ्गा हाने पश्चात गरिन्छ । जबकि आगमन परिक्रमा केहीका निकट वाजिब (आवश्यक) तथा केही विद्वानहरूका निकट सुन्नत हो तथा विदाइ परिक्रमा अनिवार्य सुन्नत (अथवा आवश्यक) छ, जुन अधिकतर ज्ञानीहरूका निकट कुनै कारणवश समाप्त हुन्छ, जस्तो कि मासिक धमर्म भएकी स्त्रीका लागि समाप्त हुन्छ । (ऐसरुत्तफ़ासीर)

ٱللَّهِ فَهُوَ خَيْرٌ لَّهُۥ عِندَ رَبِّهِۦ ۗ وَأُحِلَّتْ لَكُمُ ٱلْأَنْعَٰمُ إِلَّا مَا يُتْلَىٰ عَلَيْكُمْ ۖ فَٱجْتَنِبُوا۟ ٱلرِّجْسَ مِنَ ٱلْأَوْثَٰنِ وَٱجْتَنِبُوا۟ قَوْلَ ٱلزُّورِ ﴿٣٠﴾

को आदर गरून्[१] त्यसको स्वयंका लागि त्यसका प्रभुको पासमा राम्रोपना छ, तथा तिम्रा लागि चौपाया पशुहरू हलाल (वैध) गरिए केवल तिनीहरूबाहेक जुन तिम्रा समक्ष[२] वर्णन गरिएका छन्, तसर्थ तिमीलाई मूर्तिहरूका नराम्रोपनाबाट बच्दै रहनुपर्छ[३] तथा असत्य कुराहरूबाट पनि पन्छिनु पर्दछ ।[४]

حُنَفَآءَ لِلَّهِ غَيْرَ مُشْرِكِينَ بِهِۦ ۚ وَمَن يُشْرِكْ بِٱللَّهِ فَكَأَنَّمَا

(३१) अल्लाहको तौहीद (एकेश्वरवाद) लाई स्वीकार गर्दै[५] त्यसको साथ कसैलाई

[१]यी निषेधाज्ञाबाट तात्पर्य हज्जका ती रीतिहरू हुन् जसका विवरण अहिले भएको छ । उनका सम्मानको अर्थ उनलाई यसप्रकार सम्पन्न गर्नु हो, जुनप्रकारले भनिएको छ । अर्थात् उनको विरोध गरेर यी निषेधाज्ञाको अवहेलना नगरून् ।

[२]"जुन वर्णन गरिएका छन्" को अर्थ हो जसका निषेध हुनु वर्णन गरिसकिएको छ । जस्तै आयत حرمت عليكم الميتة والدم मा विवरण छ ।

[३] رِجْسٌ को अर्थ अपवित्रता तथा मलीनता हो । यहाँ यसबाट तात्पर्य काठ, फलाम अथवा अन्य कुनै वस्तु बनाइएका मूर्तिहरू हुन् । अर्थ यो हो कि अल्लाहका अतिरिक्त कुनै अन्यको पूजा गर्नु अपवित्रता हो तथा अप्रसन्नताका कारण हो, यसबाट बचून् ।

[४]असत्य कुरामा मिथ्या कथनका अतिरिक्त असत्य सौगन्ध खानु पनि छ (जसलाई हदीसमा शिर्क तथा माता-पिताको अवज्ञाका पश्चात तृतीय स्थानको महापापमा राखिएको छ) तथा सबभन्दा ठूलो झूठो यो हो कि अल्लाह जुन कुरोहरूबाट पवित्र छ, ती त्यससँग सम्बन्धित गरियून्, जस्तै अल्लाहको सन्तान छ, अमूक महात्मा अल्लाहका अधिकारमा सम्मिलित छन्, अथवा अमुक कार्यमाथि अल्लाह तआलाको कसरी सामार्थ्य हुनेछ ? जस्तै काफिरहरू मर्नुका पश्चात पुन: उभ्याइने कुरोलाई आश्चर्यजनक ठान्दछन् । अथवा आफ्नो तर्फबाट अल्लाहद्वारा उचित गरिएको जनावरहरूलाई आफ्ना लागि निषेध गरिहाल्थे । यी सबै झूठ हुन् । यसबाट बच्न अनिवार्य छ ।

[५] حنفاء बहुवचन हो رحس को जसको शाब्दिक अर्थ हो आकर्षित हुनु, एकातिर हुनु । एक पक्षीय हुनु । अर्थात् शिर्क (मूर्तिपूजा) बाट एकेश्वरवाद (तौहीद) तिर र कुफ़्र तथा असत्यबाट इस्लाम तथा सत्यधर्मतिर आकर्षित हुँदै ।

خَرَّ مِنَ السَّمَآءِ فَتَخْطَفُهُ الطَّيْرُ أَوْ تَهْوِي بِهِ الرِّيحُ فِي مَكَانٍ سَحِيقٍ ﴿٣١﴾

साक्षी (अंशियार) नबनाउँदै । (सुन!) अल्लाहको साक्षी ठहराउनेवाला जस्तै आकाशबाट खसिहाल्यो, अब या त उसलाई पंक्षी झम्टिलग्ने छन् अथवा हावा कुनै दूरस्थ स्थानमा फ्याँकिदिनेछ ।[1]

ذَٰلِكَ وَمَن يُعَظِّمْ شَعَٰٓئِرَ ٱللَّهِ فَإِنَّهَا مِن تَقْوَى ٱلْقُلُوبِ ﴿٣٢﴾

(३२) यो सुनिहाल्यो, (र सुन,) अल्लाहको निशानीहरू (प्रतीक) को जुन सम्मान तथा आदर गर्दछ, त त्यसको हृदयको परहेजगारीको कारण यो छ ।[2]

अथवा एक पक्षीय भएर शुद्धरूपले अल्लाहको इबादत (उपासना) गर्दै ।

[1]अर्थात् जुनप्रकार ठूला पंक्षी, साना जीवलाई अति तीब्रताले झम्टेर लग्छन् अथवा हावा कसैलाई दूरस्थ स्थानहरूमा लगि फ्याँकिदिन्छ तथा कसैलाई त्यसको सूचना नहोस् । दुबै परिस्थितिहरूमा विनाश त्यसको भाग्यमा छ । त्यसैप्रकार त्यो व्यक्ति जो एक अल्लाहको इबादत गर्दछ, त्यो सही स्वभाव एवं आत्मिक पवित्रताका अनुसार पवित्रता एवं स्वच्छताको शिखरमा आसीन हुन्छ तथा जतिखेर त्यो शिर्कको कार्य गर्दछ, त मानौं आफूलाई उच्च स्थानबाट तल तथा सफाइबाट फोहोरो तथा हिलोमा खस्दछ ।

[2] شَعَائِر बहुवचन हो شَعِيرَة को, जसको अर्थ संकेत तथा निशानी हो, जस्तै युद्धमा एक संकेत (विशेष शब्द लक्षण एवं संकेतको रूपमा) प्रयोग गरिन्छ, जसबाट उनीहरू आपसमा एक-अर्कालाई चिनिहाल्छन् । यस आधारमा अल्लाहका निशानीहरू ती हुन् जुन धार्मिक संकेत अर्थात् इस्लामका स्पष्ट अनुकरणीय आदेश हुन्, जसबाट एउटा मुसलमानको अस्तित्व एवं व्यक्तित्व स्थापित हुन्छ तथा धर्मका अनुयायीहरूबाट अलग्गै चिनिन्छ । 'सफा' तथा 'मरवः' पर्वतहरूलाई पनि यसैले अल्लाहका निशानीहरू भनिएको छ कि मुसलमान हज्ज तथा उमरामा यिनका मध्ये सई गर्दै (दगुर्छन्) । यहाँ हज्जका अन्य रीतिहरू विशेषरूपले कुर्बानी (बलि) का पशुहरूलाई अल्लाहको निशानी भनिएको छ । उनको आदरको अर्थ उनलाई राम्रो तथा मोटो पार्नु हो अर्थात् स्वस्थ एवं मोटो जनावरको बलि दिनु हो । यस सम्मानलाई अल्लाहको हार्दिक भय भनिएको छ अर्थात यो हृदयका ती कर्महरूमध्येका छ जसका आधार (संयम) अल्लाहको भय हो ।

لَكُمْ فِيهَا مَنَافِعُ إِلَىٰٓ أَجَلٍ مُّسَمًّى ثُمَّ مَحِلُّهَآ إِلَى ٱلْبَيْتِ ٱلْعَتِيقِ ﴿٣٣﴾

(३३) तिनमा तिम्रा लागि एउटा निर्धारित समयसम्मका लागि लाभ छ[१] अनि उनलाई बलि चढाउने स्थान (वेदी) ख़ानये काअ़बा हो ।[२]

وَلِكُلِّ أُمَّةٍ جَعَلْنَا مَنسَكًا لِّيَذْكُرُوا۟ ٱسْمَ ٱللَّهِ عَلَىٰ مَا رَزَقَهُم مِّنۢ بَهِيمَةِ ٱلْأَنْعَٰمِ ۗ فَإِلَٰهُكُمْ

(३४) तथा प्रत्येक सम्प्रदायका लागि हामीले बलिको विधि निर्धारित गरेका छौं ताकि उनीहरू ती चौपाया पशुहरूमाथि अल्लाहका नाम लिऊन्, जुन अल्लाहले उनीहरूलाई दिएको छ ।[३] (बुझ्हिाल)

[१]त्यो लाभ सवारी, दूध, जन्तुको अधिकता तथा ऊन (भुत्ला) आदिको प्राप्ति हो । निर्धारित समयसित तात्पर्य बलि दिइने दिन हो । अर्थात बलि दिनुका समयसम्म तिमीलाई उक्त लाभ हुन्छन्, यसबाट ज्ञात भयो कि बलिको पशुबाट जबसम्म त्यो बलि चढाइँदैन, लाभ उठाउनु मान्य छ । सहीह हदीसबाट पनि यसको पुष्टि हुन्छ । एउटा व्यक्ति आफ्नो साथमा एउटा बलिको पशु लिएर गइराखेको थियो । नबी सल्लल्लाहु अलैहि वसल्लमले त्यससित भन्नुभयो : यसमाथि सवार भइहाल, उसले भन्यो कि यो हज्जको बलिको लागि हो । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो त्यसमाथि सवार भईहाल । (सहीह बुख़ारी किताबुल हज्ज बाब रूकूबिलबुदन)

[२]हलाल (वैध) हुनुबाट तात्पर्य जहाँ त्यसको बलि गर्नु (उचित) छ । अर्थात् यो पशु हज्जका कार्यक्रम पूरा गरेपश्चात्, बैतुल्लाह तथा मक्काको हरमको सीमामा पुग्दछन् तथा त्यहाँ अल्लाहका नाममा बलि दिइन्छन्, त उपरोक्त लाभ क्रम पनि समाप्त हुन्छ । तथा यदि उनी त्यसै हरम पुग्नासाथ बलि चढाइन्छन् तथा मक्काका निर्धनहरूमा उनको मासु विभाजित गरिदिइन्छ ।

[३] منسك ، نسك ينسك को उदगम हो, अर्थ हो अल्लाहको समीपताका लागि बलि दिनु । ذبيحة (ज़बीहा) (बलि दिइएको पशु) लाई पनि نسيكة भनिन्छ, जसको बहुवचन نُسك हो । यसको अर्थ आज्ञापालन तथा इबादत (उपासना) पनि हो । किनभने अल्लाहको प्रसन्नताका लागि पशुहरूको बलि पनि इबादत हो । यसैकारण अल्लाहका अतिरिक्त अन्यका नाममा अथवा तिनका प्रसन्नताको लागि पशुको बलि अल्लाहका अतिरिक्त त्यस अन्यको इबादत हो । अथवा نُسك (सीन अरबी अक्षरमाथि अरबी वर्णमालाका स्वरमा 'अ' को मात्रा अथवा 'इ' को मात्राका साथ) स्थान सूचक रूप हो । अर्थात् बलिस्थल अथवा इबादत गरिने स्थान । त्यसैबाट हज्जका रीतिहरू छन् अर्थात् ती स्थान जहाँ हज्जका कर्मकाण्ड सम्पन्न गरिन्छन् जस्तै अरफ़ात, मुज्दलिफा, मिना तथा मक्का । हज्जका साधारण कर्मकाण्डलाई पनि रीति भन्ने गरिन्छ । आयतको प्रयोजन हो कि हामी अघि पनि प्रत्येक धर्मावलम्बीहरूका लागि बलि चढाउनु अथवा इबादत गर्नुको विधि निर्धारित गर्दैरहेका छन् ताकि उनी त्यसद्वारा अल्लाहका

إِلَٰهٌ وَاحِدٌ فَلَهُ أَسْلِمُوا ۗ وَبَشِّرِ الْمُخْبِتِينَ ﴿٣٤﴾

तिमी सबैको सत्य पूज्य मात्र एउटा नै छ, तिमी उसैका अधीन तथा आज्ञाकारी बन। विनम्रता गर्नेवालाहरूलाई शुभ-सूचना दिनुस्।

الَّذِينَ إِذَا ذُكِرَ اللَّهُ وَجِلَتْ قُلُوبُهُمْ وَالصَّابِرِينَ عَلَىٰ مَا أَصَابَهُمْ وَالْمُقِيمِي الصَّلَاةِ وَمِمَّا رَزَقْنَاهُمْ يُنفِقُونَ ﴿٣٥﴾

(३५) उनीहरू यस्ता छन् कि जब अल्लाहको वर्णन गरिन्छ तब उनका हृदय काम्न थाल्छ, र उनीहरूलाई जुन विपदा आउँदछ त्यसमा धैर्यले काम लिन्छन्, नमाज़ स्थापित गर्दछन् तथा र जे-जति हामीले उनलाई दिएका छौं, उनीहरू त्यसबाट पनि खर्च गर्दछन्।

وَالْبُدْنَ جَعَلْنَاهَا لَكُم مِّن شَعَائِرِ اللَّهِ لَكُمْ فِيهَا خَيْرٌ ۖ فَاذْكُرُوا اسْمَ اللَّهِ عَلَيْهَا صَوَافَّ ۖ فَإِذَا وَجَبَتْ جُنُوبُهَا فَكُلُوا مِنْهَا

(३६) बलिका ऊँटलाई[1] हामीले तिम्रा निम्ति अल्लाह (तआला) का चिन्ह निर्धारित गरिदिएका छौं उनीहरूमा तिम्रो लागि लाभ छ। अत: उनलाई उभ्याएर उनीमाथि अल्लाहको नाम पढ।[2] अनि जब उनका पहलु (पार्शव) धर्तीसित लाग्छन्[3] तब त्यसलाई

निकटता प्राप्त गरिरहून्। तथा त्यसमा रहस्य यो छ कि उनीहरू हाम्रो नाम लिऊन्, अर्थात् "बिस्मिल्लाह अल्लाहु अक्बर" भनी बलि देऊन् अथवा हामीलाई याद राखून्।

[1] بُدْنٌ को बहुवचन بدنة हो। यो जनावर सामान्यत: मोटो-घाटो हुन्छ यसकारण بدنة भनिन्छ। मोटो-घाटो जनावर, भाषाविदहरूले यसलाई केवल ऊँटहरूसित विशेष रूपले प्रयोग गरेका छन्, परन्तु हदीस अनुसार गाईको लागि पनि بدنة शब्दको प्रयोग उचित छ। अर्थ यो हो कि ऊँट तथा गाई जुन बलि चढाउनका निम्ति लग्छन् त्यो पनि अल्लाहको निशानी हो अर्थात् अल्लाहका ती आदेशहरूमध्ये हो जुन मुसलमानहरूका लागि विशेष तथा उनका लक्षण हुन्।

[2] صَوَافّ، مصفوفة (पंक्तिवद्ध अर्थात् उभिएका) को अर्थमा छ। ऊँटलाई यसैप्रकार उभेको अवस्थामा वध गरिन्छ कि बायाँ हातखुट्टा त्यसको बाँधिएको होस् तथा तीन खुट्टामुनि त्यो उभिएको हुन्छ।

[3] अर्थात् पूरा रगत निस्किहालोस् तथा त्यो निष्प्राण भई खसोस् त्यसपछि त्यसलाई काट्न प्रारम्भ गर। किनभने जीवित जनावरको मासु काटेर खानु निषेध छ।

«مَا قُطِعَ مِنَ الْبَهِيمَةِ وَهِيَ حَيَّةٌ، فَهُوَ مَيْتَةٌ»

وَأَطْعِمُوا الْقَانِعَ وَالْمُعْتَرَّ كَذَٰلِكَ سَخَّرْنَاهَا لَكُمْ

स्वयं पनि खाउ[1] तथा निर्धन भिखारी तथा जो भिखारी छैन त्यसलाई पनि खुवाउ,[2] यसैप्रकार

"जुन पशुबाट त्यस अवस्थामा मासु काटिन्छ कि त्यो जीवित छ त त्यो (काटिएको मासु) मृत (तथा निषेध) छ ।" (अबू दाऊद किताबुल सैद, तिर्मिजी अबवाबुस्सैद, बाब माजाअ मा कुतिअ मिनल हय्ये फहुवा मय्येतुन र इब्ने माजा)

[1]केही आलिमहरूका निकट यो आदेश आवश्यक छ अर्थात बलिको मासु खानु कुर्बानी गर्नेवालाको लागि आवश्यक (वाजिब) छ तथा अधिकतर आलिमहरूका निकट यो आदेश राम्रोको लागि हो अथवा औचित्य छ अर्थात् यदि खाइन्छ त उचित अथवा प्रिय छ तथा कोही नखाओस् बरु पुरै विभाजित गरिदिन्छ त कुनै पाप छैन ।

[2] قانع को एउटा अर्थ भिखारी (याचक) छ तथा दोस्रो अर्थ सन्तोष गर्नेवालाका लागि गरिएका छन् अर्थात् त्यो प्रश्न नगरोस् तथा معتر को अर्थ केहीले विना याचना समक्ष आउनेवालाका लागि छन् । तथा केहीले قانع को अर्थ माँग्नेवाला तथा معتر को अर्थ दर्शक अर्थात् भेट्नेवालाका लागि हुन् । यस आयतबाट भावार्थ निकाल्दै भनिन्छ कि बलिको मासुको तीन भाग गरियोस्: एउटा आफ्नो लागि (दोस्रो भेट्नेवालाहरूको लागि तथा सम्बन्धिवालाहरूका लागि तथा तेस्रो भाग भिक्षु प्रश्नकर्ताहरू, तथा समाजका आवश्यकता भएका मानिसहरूका लागि जसको पुष्टिमा यो हदीस प्रस्तुत गरिन्छ जसमा रसूल अल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो: "मैले तिमीलाई (प्रथममा) तीन दिनभन्दा अधिक बलिको मासु भण्डार गरी राख्नका लागि मनाही गरेको थिएँ, परन्तु अब आज्ञा छ कि खाउ तथा जो उचित ठान्दछौ भण्डार गर ।" "दोस्रो कथनका शब्द यसप्रकार शब्द यसप्रकार हुन्, "त खाउ, खुवाउ एवं दान गर ।" (अल-बुख़ारी किताबुल अजाही, मुस्लिम किताबुल, अजाही, बाबु ब्याने मा कान मिनल नहये अन अकलिल लहूमिल अजाही बाद सलास....वस्सुनन) केही आलिम दुई भाग गर्नुका पक्षमा छन् । आधा आफ्नो लागि आधा दानका लागि, उनीहरू यसभन्दा विगत आयत ﴿فَصَلِّ لِرَبِّكَ وَانْحَرْ﴾ बाट भावार्थ निकाल्दछन् । परन्तु वास्तवमा कुनै पनि हदीसबाट यसप्रकार दुई अथवा तीन भागहरूमा विभाजित गर्नुको आदेश निस्कन्न, बरु उनमा सामान्यत: खानु-खुवाउनुको आदेश छ । अत: यस साधारणतालाई आफ्नो स्थानमा स्थाई रहनुपर्छ तथा कुनै विभाजनका लागि बाध्य बनाउनु हुँदैन । परन्तु बलिका पशुहरूका छालाको विषयमा एकमत छन् कि यसलाई या त आफ्नो प्रयोगमा ल्याउ अथवा दान गर, यसलाई बिक्री गर्नुको आज्ञा छैन । जस्तो कि हदीसमा छ (मुसनद अहमद भाग ४/१५) परन्तु केही आलिमहरूले चर्मलाई स्वयं बिक्री गरी त्यसको मूल्य निर्धनहरूलाई बाँडिदिनुको आज्ञा दिएका छन् । (इब्ने कसीर)

لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٣٦﴾

हामीले चौपायाहरूलाई तिम्रो अधीन गरिदिएका छौं ताकि तिमी कृतज्ञता व्यक्त गर ।

لَنْ يَّنَالَ اللّٰهَ لُحُوْمُهَا وَلَا دِمَآؤُهَا وَلٰكِنْ يَّنَالُهُ التَّقْوٰى مِنْكُمْ ؕ كَذٰلِكَ سَخَّرَهَا لَكُمْ لِتُكَبِّرُوا اللّٰهَ عَلٰى مَا هَدٰىكُمْ ؕ وَبَشِّرِ الْمُحْسِنِيْنَ ﴿٣٧﴾

(३७) अल्लाह (तआला) लाई बलिका मासु पुग्दैनन्, न तिनका रगत बरु त्यसलाई त तिम्रो हार्दिक परहेजगारी पुग्दछ। त्यसैप्रकार अल्लाहले ती पशुहरूलाई तिम्रो आज्ञाकारी गरिदिएको छ ताकि तिमी त्यसको मार्गदर्शन (को कृतज्ञता) मा त्यसको महिमाको वर्णन गर

**एउटा आवश्यक स्पष्टीकरण** : बलि चढाउनुको यो वर्णन हज्जको समस्याका साथ आएको छ, जसबाट हदीसलाई अस्वीकार गर्नेवाला यो अर्थ निकाल्दछन् कि बलि चढाउनु मात्र हाज़िहरूका लागि नै छ अन्य मुसलमानहरूका लागि कुनै आवश्यक छैन । परन्तु यो कुरो उचित छैन । कुर्बानीको सम्बन्धमा सामान्य आदेश पनि अन्य स्थानमा छ ।

﴿ فَصَلِّ لِرَبِّكَ وَانْحَرْ ﴾

"आफ्नो प्रभुका लागि नमाज़ पढ तथा कुर्बानी गर । (सूर: अल-कौसर)

यसको स्पष्टीकरण तथा व्याख्या (व्यवहारिक) नबी सल्लल्लाहु अलैहि वसल्लमले यसप्रकार भन्नुभयो कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम स्वयं मदीनामा प्रत्येक वर्ष दस जिलहिज्जाका दिन बलि गर्दैरहे तथा मुसमानहरूलाई पनि कुर्बानी (बलि) गर्नका लागि जोड गर्दैरहनु भयो। अत: सहाबा पनि गर्दैरहे। यसका अतिरिक्त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले बलि दिने सम्बन्धमा अन्य धेरै निर्देश दिनुभयो । त्यहाँ यो पनि भन्नुभयो कि दस जिलहिज्जाका दिन हामी सर्वप्रथम (ईद) को नमाज़ पढौं तथा त्यसका पश्चात गई बलि दिऊँ, तथा भन्नुभयो : जसले नमाज़, (ईद) भन्दा पूर्व आफ्नो बलि दियो, त्यसले मासु खानमा शीघ्रता गऱ्यो, त्यसको बलि भएन । "सहीह बुखारी किताबुल ईदैन बाबुल तबकीर इलल ईद, तथा मुस्लिम किताबुल अजाही) यसवाट पनि स्पष्ट छ कि बलि चढाउनुको आदेश प्रत्येक मुसलमानको लागि छ, त्यो जहाँ पनि होस्। किनकि हाजीले त प्राय: ईदूल अजहाको नमाज़ नै पढ्दैनन्। जसबाट यो स्पष्टरुपले प्रलक्षित हुन्छ कि यो आदेश हाजिहरूका अतिरिक्तका लागि नै छ। तैपनि यो आवश्यक छैन सुन्नत मोअक्किदा हो। यसैप्रकार देखावटीपनाको विचारले गरिएको कैयन् बलि गर्नुको रीत पनि सुन्नतको विरूद्ध हो। हदीसका अनुसार घरका प्रत्येक व्यक्तिको तर्फबाट यो जनावरको बलि पर्याप्त छ । सहाबाको कर्म यसैको अनुसार थियो । (तिर्मिज़ी अबवाबुल अजाही, बाब माजाअ अन्नश्शातल वाहिदति तुज्जी, अन अहलिल बैत, व इब्ने माजा)।

तथा पुण्य कार्य गर्नेवालाहरूलाई शुभ-सूचना सुनाइदिनुस् ।

إِنَّ اللَّهَ يُدَافِعُ عَنِ الَّذِينَ آمَنُوا ۗ إِنَّ اللَّهَ لَا يُحِبُّ كُلَّ خَوَّانٍ كَفُورٍ ﴿٣٨﴾

(३८) (सुनिराख !) निःसन्देह सच्चा ईमानवालाहरूका शत्रुलाई अल्लाह (तआला) स्वयं हटाइदिन्छ ।[1] कुनै विश्वासघाती कृतघ्न अल्लाह (तआला) लाई प्रिय छैन ।

أُذِنَ لِلَّذِينَ يُقَاتَلُونَ بِأَنَّهُمْ ظُلِمُوا ۚ وَإِنَّ اللَّهَ عَلَىٰ نَصْرِهِمْ لَقَدِيرٌ ﴿٣٩﴾

(३९) जुन (मुसलमानहरू) बाट (काफ़िर) युद्ध गरिराखेका छन् उनीहरूलाई पनि लड्नुको आज्ञा प्रदान गरिन्छ किनभने उनीहरू पीडित छन्[2] निःसन्देह उनको सहायताका लागि अल्लाह पूर्ण सामर्थ्य राख्दछ ।

الَّذِينَ أُخْرِجُوا مِن دِيَارِهِم بِغَيْرِ حَقٍّ إِلَّا أَن يَقُولُوا رَبُّنَا اللَّهُ ۗ وَلَوْلَا دَفْعُ اللَّهِ النَّاسَ

(४०) यी तिनीहरू हुन् जसलाई अकारण आफ्ना घरहरूबाट निकालियो, केवल उनको यस कथनमाथि कि हाम्रो प्रभु मात्र अल्लाह हो । यदि अल्लाह

[1]जसरी ६ हिजरीमा काफिरहरूले आफ्ना प्रभावका कारण मुसलमानहरूलाई मक्का गई "उमरह गर्न दिएनन्, अल्लाह तआलाले दुई वर्ष पश्चात नै काफ़िरहरूको यस प्रभावलाई समाप्त गरी मुसलमानहरूबाट उनका शत्रुलाई हटाइदियो तथा मुसलमानहरूलाई उनीमाथि प्रभावशाली बनाइदियो ।

[2]अधिकतर पूर्वधर्मावलम्बीहरूको कथन छ कि यस आयतबाट सर्वप्रथम धर्मयुद्धको आदेश दिइयो, जसका दुई उद्देश्य वर्णन गरिएका छन्, नृशंसताको निवारण तथा अल्लाहको आदेशको प्रभुत्व । यसकारण कि नृशंसितको सहायता तथा उनको समर्थन नगरियोस्, त त्यसपश्चात संसारमा शक्तिशाली शक्तिहीनलाई तथा साधनप्राप्त, मानिसहरूलाई जीवित रहन दिने छैनन्, जसबाट धर्ती आतङ्क एवं उपद्रवले भरिनेछ । यसैप्रकार अल्लाहका आदेशहरूलाई उच्च गर्नका लागि प्रयत्न गरिन्न तथा असत्यको टाउको कुल्चिएन भने असत्यको प्रभावले पनि संसारको शान्ति व्यवस्था तथा अल्लाहका नाम लिनेवालाहरूका लागि कुनै इबादतको स्थान शेष रहने छैन । अधिक व्याख्याका लागि हेर्नुस् सूरः बक़रः आयत २५१ को व्याख्या) । صوامع (صومعة को बहुवचन) बाट सानो गिर्जाघर तथा بيع (بيعة को बहुवचन) बाट ठूलो गिर्जाघर, صلوات बाट यहूदीहरूको पूजास्थान तथा مساجد बाट मुसलमानहरूको इबादतको स्थान तात्पर्य छन् ।

بَعْضَهُمْ بِبَعْضٍ لَّهُدِّمَتْ صَوَامِعُ وَبِيَعٌ وَّصَلَوٰتٌ وَّمَسٰجِدُ يُذْكَرُ فِيْهَا اسْمُ اللّٰهِ كَثِيْرًا ؕ وَلَيَنْصُرَنَّ اللّٰهُ مَنْ يَّنْصُرُهٗ ؕ اِنَّ اللّٰهَ لَقَوِيٌّ عَزِيْزٌ ۝

(तआला) मानिसहरूलाई आपसमा एक-अर्काबाट नहटाइरहेको भए तथा मस्जिद तथा गिर्जाघर तथा यहूदीहरूका पूजास्थली तथा ती मस्जिदहरू पनि ध्वस्त गरिन्थे, जहाँ अल्लाहको नाम अधिकताले लिईन्छ। जो अल्लाहको सहायता गर्नेछ अल्लाह पनि त्यसको अवश्य सहायता गर्नेछ, नि:सन्देह अल्लाह (तआला) अत्यन्त शक्तिशाली एवं प्रभावशाली छ।

اَلَّذِيْنَ اِنْ مَّكَّنّٰهُمْ فِي الْاَرْضِ اَقَامُوا الصَّلٰوةَ وَاٰتَوُا الزَّكٰوةَ وَاَمَرُوْا بِالْمَعْرُوْفِ

(४१) यी त्यसता मानिसहरू हुन् कि यदि हामी यिनका पाइला धर्तीमा दृढ गरिदिन्छौं भने यिनी नियमितरूपले नमाज़ सम्पन्न गर्नेछन् तथा ज़कात दिनेछन् तथा राम्रा कार्यहरूको आदेश दिनेछन् तथा नराम्रो कर्महरूबाट मनाही गर्नेछन्।[1]

[1]यस आयतमा इस्लमी राज्यको आधारभूत लक्ष्य तथा उद्देश्य वर्णन गरिएका छन्, जसलाई ख़िलाफत राशिदा तथा प्रथम कालका अन्य इस्लामी राज्यहरूमा लागू गरियो तथा उनीहरूले आफ्नो प्राविधानमा यिनलाई प्राथमिकता दिए। जसकारण उनका राज्यहरूमा शान्ति थियो, प्रेम भावना एवं प्रसन्नता पनि रहयो तथा मुसलमानहरूका शिर ठाडो र सम्मानित पनि थिए। आज पनि सउदी अरबको सरकार यी कुराहरूको प्रबन्ध गर्दछ, अत: त्यसको कारण त्यो अहिलेपनि शान्ति व्यवस्थामा संसारका सबै देशहरूका लागि एउटा अनुपम सरकार हो। आजकल इस्लामी देशहरूमा कल्याणकारी सरकारको स्थापनाको बडो प्रचार छ तथा प्रत्येक आउने शासक यसको दावी गर्दछ। परन्तु प्रत्येक इस्लामी देशमा अशान्ति, उपद्रव, हत्या तथा पतन प्रतिदिनको कार्य हो। यसको कारण यो हो कि सबै अल्लाहद्वारा भनिएको मार्गलाई नअपनाइकन पाश्चात्य देशहरूका गणतन्त्र एवं धर्मनिरपेक्षताका नियमहरूका आधारमा उत्थान तथा सफलताको आशा गर्दछन्, जुन आकाशबाट तारा टिप्नु तथा वायुलाई मुट्ठीमा बन्द गर्नुको समान छ। जबसम्म इस्लामी राज्य कुर्आनद्वारा भनिएका नियमहरूका अनुसार नमाज़को स्थापना तथा ज़कात तिर्नुको साथसाथै राम्रो कुराको आदेश दिनु तथा नराम्रो कुराबाट रोक्नुको कार्य गर्ने छैनन् तथा वरीयता क्रममा यिनलाई प्रमुखता दिने छैनन्, उनीहरू कल्याणकारी सरकारको गठनमा सफल हुने छैनन्।

وَنَهَوْا عَنِ الْمُنْكَرِ ۗ وَلِلّٰهِ عَاقِبَةُ الْأُمُوْرِ ﴿٤١﴾

र सबै कार्यहरूको परिणाम अल्लाहको अधिकारमा छ ।[1]

وَاِنْ يُّكَذِّبُوْكَ فَقَدْ كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوْحٍ وَّعَادٌ وَّثَمُوْدُ ﴿٤٢﴾

(४२) तथा यदि यी मानिसहरू तपाईंलाई झुठलाउँछन् (त आश्चर्यको कुरा छैन) त यिनीभन्दा पूर्व नूहका समुदाय तथा आद एवं समूद ।

وَقَوْمُ اِبْرٰهِيْمَ وَقَوْمُ لُوْطٍ ﴿٤٣﴾

(४३) तथा इब्राहीमका समुदाय तथा नूहका समुदाय ।

وَّاَصْحٰبُ مَدْيَنَ ۚ وَكُذِّبَ مُوْسٰى فَاَمْلَيْتُ لِلْكٰفِرِيْنَ ثُمَّ اَخَذْتُهُمْ ۚ فَكَيْفَ كَانَ نَكِيْرِ ﴿٤٤﴾

(४४) तथा मदयनवाला पनि आ-आफ्ना नबीहरूलाई झुठ्लाइसकेका छन्। मूसालाई पनि झुठ्लाइ सकिएको छ, तसर्थ मैले काफिरहरूलाई अलिकति अवसर दिएँ अनि समातिहालें ।[2] पछि मेरो प्रकोप कस्तो भयो ?[3]

[1]अर्थात् प्रत्येक कुरोको केन्द्र अल्लाहको आदेश तथा त्यसको प्रबन्ध नै हो । त्यसको आदेशबिना सम्पूर्ण जगतमा एउटा पात पनि हल्लिन सक्दैन । कसरी कोही अल्लाहका आदेश तथा नियमहरूबाट मुख फर्काएर वास्तविक कल्याण तथा सार्थकता प्राप्त गर्न सक्दछ ?

[2]यसमा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिइँदैछ कि यी मक्काका काफिर यदि तपाईंलाई झूठा भनिराखेका छन् भने यो कुनै नौलो कुरा होइन । प्राचीन कालका समुदाय पनि आफ्ना पैग़म्बरहरूका साथ यस्तै व्यवहार गर्दै आइराखेका छन् तथा म पनि उनीहरूलाई अवसर दिंदै रहे तथा जब उनको अवसरको समय समाप्त भयो, त उनीहरूलाई सत्यानाश गरियो । यसमा मक्काका काफिरहरूको लागि चेतावनी एवं संकेत छ कि झुठ्लाउनुका उपरान्त पश्चात अहिलेसम्म तिमी अल्लाहको पकडबाट सुरक्षित बचेका छौ, त यो नभन्ठान्नू कि तिमीलाई कोही समात्ने तथा सोध्नेवाला छैन । बरु यो अल्लाहको तर्फबाट अवसर हो, जुन प्रत्येक समुदायलाई दिइन्छ। तर त्यो यस अवसरको लाभ उठाइ आज्ञा-पालन तथा आज्ञाकारिताको मार्ग अपनाउँदैनन् त फेरि उनलाई बर्बाद अथवा मुसलमानहरूद्वारा पराजित गराइ उनीहरूलाई अपमानित तथा निरादर गरिन्छ ।

[3]अर्थात् कसरी मैले उनीहरूलाई आफ्नो उपकारहरूबाट बञ्चित गरी प्रकोप तथा विनाशको द्वारमा पुऱ्याइदिएँ ।

فَكَاَيِّنْ مِّنْ قَرْيَةٍ اَهْلَكْنٰهَا وَهِيَ ظَالِمَةٌ فَهِيَ خَاوِيَةٌ عَلٰى عُرُوْشِهَا وَبِئْرٍ مُّعَطَّلَةٍ وَّقَصْرٍ مَّشِيْدٍ ۝٤٥

(४५) धेरै वस्तीहरू छन् जसलाई हामीले ध्वस्त गरिदियौं, यसकारण कि उनीहरू अत्याचारी थिए, त उनीहरू आफ्ना छतहरूका साथ भत्किएका छन् । तथा धेरैजसो आबाद इनारहरू बेकार भइसकेका छन् तथा धेरैजसो पक्का तथा अग्ला महल निर्जन (सुनसान) भएका छन् ।

اَفَلَمْ يَسِيْرُوْا فِي الْاَرْضِ فَتَكُوْنَ لَهُمْ قُلُوْبٌ يَّعْقِلُوْنَ بِهَآ اَوْ اٰذَانٌ يَّسْمَعُوْنَ بِهَا ۚ فَاِنَّهَا لَا تَعْمَى الْاَبْصَارُ وَلٰكِنْ تَعْمَى الْقُلُوْبُ الَّتِيْ فِي الصُّدُوْرِ ۝٤٦

(४६) के उनीहरू धर्तीमा भ्रमण गर्दा देखेनन्, जुन उनका हृदय यी कुराहरूलाई बुझ्थे अथवा कानहरूबाट नै यी (घटनाहरू) लाई सुन्थे, कुरो यो छ कि मात्र आँखा नै अन्धा हुँदैनन्, बरु ती हृदय पनि अन्धा हुन्छन् जो छातिमा छन् ।[1]

وَيَسْتَعْجِلُوْنَكَ بِالْعَذَابِ وَلَنْ يُّخْلِفَ اللّٰهُ وَعْدَهٗ ۭ وَاِنَّ يَوْمًا عِنْدَ رَبِّكَ كَاَلْفِ سَنَةٍ مِّمَّا تَعُدُّوْنَ ۝٤٧

(४७) तथा उनी यातनाको तपाईंसित शीघ्र माँग गरिराखेका छन्, अल्लाह तआला कदापि वचनको विरूद्ध गर्नेछैन, हो निश्चय नै तपाईंको प्रभुका निकट एक दिन तपाईंको गणनाका अनुसार एक हजार वर्षको छ ।[2]

---

[1]तथा जब कुनै समुदाय विचलनको यस स्थानमा पुग्दछ कि शिक्षा ग्रहण गर्नुको योग्यता पनि गुमाउँछ त मार्गदर्शनको सट्टा विगत समुदायहरूको जस्तै अपमान तथा विनाश त्यसको भाग्य बन्दछ । आयतमा क्रिया تعقل लाई हृदयको कार्य भनिएको छ, जसबाट यो अर्थ निकालिएको छ कि बुद्धिको स्थान हृदय हो तथा केही विद्वान भन्छन् कि बोधको स्थान मस्तिष्क हो । केही अन्यको भनाइ छ कि यी दुवै कुरामा कुनै प्रतिकूलता छैन, यसकारण कि बुद्धि तथा विचारका लागि हृदय तथा मस्तिष्क दुवैको आपसमा घनिष्ट सम्बन्ध छ । (फ़तहुल क़दीर, ऐसरूत्तफ़ासीर)

[2]यसकारण कि यिनीहरू आफ्ना गणनाका अनुसार शीघ्रता गरिराखेका छन् । परन्तु अल्लाह तआलाको गणनाका अनुसार एकदिन पनि हजार वर्षको छ । यस आधारले त्यो यदि कसैलाई एकदिन (चौबिस घण्टा) को अवसर दिन्छ भने हजार वर्ष, आधा दिनको अवसर दिन्छ भने पाँच सय वर्ष घण्टा (जुन २४ घण्टाको चौथाइ छ) अवसर दिन्छ भने ढाई सय वर्षको अवधि यातनाको लागि आवश्यक छ । وهلم جرا यसप्रकार अल्लाहको तर्फबाट कसैलाई एक घण्टाको अवसर प्राप्त हुनुको अर्थ लगभग ४० वर्षको अवसर हो । (ऐसरूत्तफ़ासीर)

| | |
|---|---|
| (४८) तथा धेरैजसो अन्याय गर्ने वस्तीहरूलाई हामीले छुट (मोहलत) दियौं, अनि अन्तमा उनीहरूलाई समातिहाल्यौं, तथा मतिरै फर्किआउनु पर्नेछ ।[1] | وَكَأَيِّنْ مِّنْ قَرْيَةٍ أَمْلَيْتُ لَهَا وَهِيَ ظَالِمَةٌ ثُمَّ أَخَذْتُهَا وَإِلَيَّ الْمَصِيرُ ﴿٤٨﴾ |
| (४९) घोषणा गरिदेउ कि हे मानिसहरू ! म तिमीहरूलाई खुल्ला रूपले सचेत गर्नेवाला छु ।[2] | قُلْ يَا أَيُّهَا النَّاسُ إِنَّمَا أَنَا لَكُمْ نَذِيرٌ مُّبِينٌ ﴿٤٩﴾ |
| (५०) तसर्थ जसले ईमान ल्याएका छन् (विश्वास गरेका छन्) तथा सत्कर्म गरेका छन् उनैका लागि मोक्ष छ, तथा सम्मानित जीविका । | فَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَهُم مَّغْفِرَةٌ وَرِزْقٌ كَرِيمٌ ﴿٥٠﴾ |
| (५१) तथा जो हाम्रा आयतहरूलाई निचा देखाउनमा लागेका छन्,[3] तिनै नरकवासी हुन् । | وَالَّذِينَ سَعَوْا فِي آيَاتِنَا مُعَاجِزِينَ أُولَٰئِكَ أَصْحَابُ الْجَحِيمِ ﴿٥١﴾ |

एउटा अन्य अर्थ यो हो कि अल्लाहको सामर्थ्यमा एक दिन तथा एक हजार वर्ष समान छ, यसकारण पूर्व तथा विलम्बमा कुनै अन्तर पर्दैन, यिनी शीघ्र माँगदछन्, त्यो विलम्ब गर्दछ, परन्तु यो कुरो त निश्चित छ कि त्यो आफ्नो वादा (वाचा) अवश्य पूरा गर्नेछ । तथा केही विद्वानहरूले यसलाई आखिरततिर संकेत मानेका छन् कि अत्याधिक भयानकताको कारण क़ेयामतको एक दिन हजार वर्ष बरु कसै-कसैलाई पचास वर्ष लाग्नेछ । तथा केहीले भने कि आखिरत (प्रलय) को दिन वास्तवमा हजार वर्षको हुनेछ ।

[1]यसकारण यहाँ अवसर दिनुको नियमलाई पुन: वर्णन गरेको छ कि मेरो तर्फबाट यातनमा चाहे जति ढिलो होस्, तर मेरो पकडबाट कोही बच्न सक्दैन, न कोही भाग्न सक्दछ, त्यसलाई फर्केर अन्तमा मतिर नै आउनु पर्नेछ ।

[2]यो काफ़िर तथा मूर्तिपूजकहरूको यातनाको माँगमाथि भनिँदैछ कि मेरो कार्य त सतर्क गर्नु तथा शुभ-सूचना पुऱ्याउनु हो । यातना दिनु अल्लाहको कार्य हो, त्यो शीघ्र समातोस् अथवा ढिलो गरी, त्यो आफ्नो इच्छा तथा योजना अनुसार यो कार्य गर्दछ, जसको ज्ञान पनि अल्लाहको अतिरिक्त कसैलाई छैन । यस सम्बोधनसित सम्बोधित मूलत: मक्काका मूर्तिपूजक हुन्, तर उहाँ समस्त मानव जगतका लागि मार्गदर्शक तथा रसूल (सन्देशवाहक) बनेर आएका थिए, यसकारण सम्बोधन يا أيها الناس (हे मानिसहरू !) का शब्दबाट गरिएको छ, यसमा क़ेयामतसम्म आउनेवाला ती समस्त क़ाफ़िर तथा मूर्तिपूजक आइहाले जो मक्काका काफ़िरहरूका जस्तै रीति अपनाउने छन् ।

[3]معجزين को अर्थ हो यो विचार गर्दै कि हामी विवश गरिदिनेछौं, थकाइदिनेछौं तथा हामी उनको पकड गर्ने सामर्थ्य राख्ने छैनौं । यसकारण कि उनी मृत्युका पश्चात उभ्याइने तथा हिसाब-किताबलाई मान्दैनथे ।

وَمَآ اَرۡسَلۡنَا مِنۡ قَبۡلِكَ مِنۡ رَّسُوۡلٍ وَّلَا نَبِيٍّ اِلَّاۤ اِذَا تَمَنّٰۤى اَلۡقَى الشَّيۡطٰنُ فِىۡۤ اُمۡنِيَّتِهٖ ۚ فَيَنۡسَخُ اللّٰهُ مَا يُلۡقِى الشَّيۡطٰنُ ثُمَّ يُحۡكِمُ اللّٰهُ اٰيٰتِهٖ ؕ وَاللّٰهُ عَلِيۡمٌ حَكِيۡمٌ ۙ﴿۵۲﴾

(५२) तथा हामीले तपाईंभन्दा पूर्व जुन रसूल तथा नबीलाई पठायौं (त्योसँग यो भयो कि) जब त्यसले आफ्नो हृदयमा कुनै कामना गर्नथाल्यो, शैतानले त्यसको कामनामा केही मिसाइदियो, त शैतानको मिसावटलाई अल्लाह (तआला) मिटाइदिन्छ, अनि आफ्नो कुरा दृढ गरिदिन्छ ।[1] अल्लाह (तआला) ज्ञानी तथा गुणवाला छ ।

لِّيَجۡعَلَ مَا يُلۡقِى الشَّيۡطٰنُ فِتۡنَةً لِّلَّذِيۡنَ فِىۡ قُلُوۡبِهِمۡ مَّرَضٌ وَّالۡقَاسِيَةِ قُلُوۡبُهُمۡ ؕ

(५३) यो यसकारण कि शैतानी मिसावटलाई अल्लाह (तआला) ती मानिसहरूको परीक्षाको साधन बनाइदेओस्, जसका हृदयमा रोग छ तथा

[1] تَمَنّٰى को एउटा अर्थ कामना गऱ्यो अथवा मनमा सोच्यो । दोस्रो अर्थ हो पढ्यो अथवा पाठ गऱ्यो । यसै आधारमा أمنية को अनुवाद कामना विचार अथवा पाठ हुनेछ । प्रथम अर्थको आधारमा भावार्थ हुनेछ, त्यसको कामनामा शैतानले बाधा पुऱ्यायो ताकि तिनी पूरा हुन नसकून् । तथा रसूल एवं नबीको कामना यो हुन्छ कि मानिस अधिकभन्दा अधिक संख्यामा ईमान ल्याऊन् । शैतान बाधाहरू पुऱ्याएर धेरै मानिसहरूलाई ईमानवाट टाढा राख्दछ । द्वितीय अर्थको आधारमा भावार्थ हुनेछ कि जहिलेपनि अल्लाहका रसूल अथवा नबी प्रकाशनाद्वारा प्राप्त कथनलाई पढ्दछ तथा त्यसको पाठ गर्दछ, त शैतान त्यसको पाठमा आफ्ना कुरा मिसावट गर्नुको प्रयत्न गर्दछ । अथवा त्यसका सम्बन्धमा मानिसहरूका हृदयमा शंका तथा सन्देह उत्पन्न गर्दछ तथा त्रुटिहरू फेला पार्नुको प्रयत्न गर्दछ । अल्लाह तआला शैतानका बाधाहरूलाई हटाइ अथवा पाठमा मिसावट गर्ने प्रयत्नलाई असफल गरी अथवा शैतानद्वारा उत्पन्न गरिएका सन्देहको निवारण गरी आफ्नो कुरालाई अथवा आफ्ना आयतहरूलाई दृढता प्रदान गर्दछ । यसमा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिईदैछ कि शैतानको यो कार्य मात्र तपाईंसँग छैन । तपाईंभन्दा पूर्व जो पनि नबी अथवा रसूल आए सबैका साथ यही कुरा गर्दैरहेको छ । तसर्थ तपाई घबराउनु पर्दैन, शैतानका यी उद्दण्डता तथा षड्यन्त्रहरूवाट जसरी तपाईंभन्दा पूर्वका नबीहरूलाई हामी सुरक्षित राख्दै आएका छौं, निःसन्देह तपाईंलाई पनि सुरक्षित राख्नेछौं तथा शैतानको कामना विपरीत आफ्नो कुरा पूरा गरिरहनेछौं । यहाँ केही व्याख्याकारहरूले غرانيق علی का कथाहरू वर्णन गरेका छन्, जुन शोधकर्ताहरूका निकट सिद्ध नै छैनन् । यसकारण त्यसलाई यहाँ प्रस्तुत गर्नुको कुनै आवश्यकता महसुस गरिएको छैन ।

وَإِنَّ الظَّٰلِمِينَ لَفِي شِقَاقٍۭ بَعِيدٍ ۝٥٣

जसका हृदय कठोर छन् ।[1] निःसन्देह पापी मानिसहरू घोर विरोधमा छन् ।

وَلِيَعْلَمَ الَّذِينَ أُوتُوا الْعِلْمَ أَنَّهُ الْحَقُّ مِن رَّبِّكَ فَيُؤْمِنُوا بِهِ فَتُخْبِتَ لَهُ قُلُوبُهُمْ ۗ وَإِنَّ اللَّهَ لَهَادِ الَّذِينَ آمَنُوا إِلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ۝٥٤

(५४) तथा यसकारण पनि कि जसलाई ज्ञान प्रदान गरिएको छ, उनले विश्वास गरिहालून् कि यो तपाईंका प्रभुको तर्फबाट नै पूर्ण सत्य छ, अनि उनी त्यसमा ईमान ल्याऊन् तथा उनका हृदय त्यसतिर झुकून् ।[2] निःसन्देह अल्लाह (तआला) ईमानवालाहरूलाई मार्गदर्शन गर्नेवाला नै छ ।[3]

وَلَا يَزَالُ الَّذِينَ كَفَرُوا فِي مِرْيَةٍ مِّنْهُ حَتَّىٰ تَأْتِيَهُمُ

(५५) तथा काफ़िर त्यस अल्लाहको प्रकाशनामा सदैव सन्देह तथा शंका नै गरिरहनेछन् यहाँसम्मकि एक्कासि उनका टाउकोमाथि क़ेयामत (प्रलय)

[1]अर्थात् शैतानका यी गतिविधिहरू यसकारण छन् कि मानिसहरूलाई विचलित गरोस् तथा त्यसको जालमा ती मानिस फँस्छन्, जसका हृदयमा कुफ्र (अविश्वस) तथा द्वयवादको रोग हुन्छ अथवा पाप गरेर उनका हृदय कठोर भइसकेका हुन्छन् ।

[2]अर्थात् यो शैतानी वाक्य जुन वास्तवमा शैतानी अपहरण हो, यदि यी द्वयवादी एवं सन्देह गर्नेवाला मानिस तथा काफ़िर एवं मूर्तिपूजकका पक्षमा उपद्रवको साधन छ भने अर्कोतिर जो ज्ञानी एवं तत्वज्ञ छन्, उनको ईमान तथा विश्वासमा वृद्धि भएर जान्छ तथा उनी बुझ्दछन् कि अल्लाहद्वारा उतारिएको कुरो अर्थात कुर्‌आन सत्य छ । कारण जसबाट उनका हृदय अल्लाहका समक्ष झुक्दछन् ।

[3]संसारमा पनि तथा आख़िरतमा पनि । संसारमा यसप्रकार कि उनको मार्गदर्शन सत्यतिर गरिदिन्छ तथा त्यसलाई स्वीकार गर्ने तथा पालन गर्ने सौभाग्य प्राप्त गर्दछ । असत्यको समझ पनि उसलाई प्रदान गरिदिन्छ तथा त्यसबाट उनलाई बचाउँछ तथा आख़िरतको सोझो मार्ग दर्शाउनुको अर्थ यो हो कि नरकका दुखद यातनाहरूबाट बचाएर स्वर्गमा प्रवेश दिन्छ तथा त्यहाँ आफ्नो उपकार तथा साक्षात दर्शन पनि प्रदान गर्नेछ ।

السَّاعَةُ بَغْتَةً أَوْ يَأْتِيَهُمْ عَذَابُ يَوْمٍ عَقِيمٍ ﴿٥٥﴾

आइपुग्छ अथवा उनका निकट त्यस दिनको प्रकोप आउँछ जुन शुभबाट शून्य छ ।[1]

الْمُلْكُ يَوْمَئِذٍ لِّلَّهِ يَحْكُمُ بَيْنَهُمْ فَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فِي جَنَّاتِ النَّعِيمِ ﴿٥٦﴾

(५६) त्यस दिन केवल अल्लाहकै राज हुनेछ,[2] त्यही उनका बीच निर्णय गर्नेछ । ईमानवाला तथा सत्कर्मी त सुखले परिपूर्ण स्वर्गमा हुनेछन् ।

وَالَّذِينَ كَفَرُوا وَكَذَّبُوا بِآيَاتِنَا فَأُولَٰئِكَ لَهُمْ عَذَابٌ مُّهِينٌ ﴿٥٧﴾

(५७) तथा जसले कुफ्र गरे तथा हाम्रा आयतहरूलाई असत्य भने, उनका लागि अपमानकारी यातनाहरू छन् ।

[1] يوم عقيم (बाँझो दिन) बाट तात्पर्य केयामतको दिन हो । यसलाई बाँझो यसकारण भनिएको छ कि यसदिन पश्चात कुनै दिन आउने छैन, जसरी बाँझो त्यसलाई भनिन्छ जसको कोही सन्तान हुँदैन । अथवा यसकारण कि काफिरहरूका लागि त्यस दिन कुनै दया हुनेछैन, अर्थात् उनका लागि शुभबाट शून्य हुनेछ । जसरी तीव्र गतिका हावा (बतासहरू) लाई जुन प्रकोपका रूपमा आउँदै गरेको छ 'बाँझो वायु' भनिएको छ ।

﴿إِذْ أَرْسَلْنَا عَلَيْهِمُ الرِّيحَ الْعَقِيمَ﴾

"जब हामीले उनीमाथि बाँझो हावा पठायौं ।" (सूरः अज़्ज़ारियात-४१)

अर्थात् यस्तो हावा जसमा न कुनै भलाई थियो न वर्षाको शुभ-सूचना ।

[2]अर्थात् संसारमा त अस्थायीरूपले उपहार स्वरूप अथवा परीक्षार्थ मानिसहरूलाई पनि शासन तथा अधिकार तथा आधिपत्य प्राप्त हुन्छ । परन्तु आख़िरतमा कसैसित कुनै राज्य तथा अधिकार हुनेछैन, मात्र एक अल्लाहको राज्य तथा त्यसको शासन हुनेछ, उसैको पूर्ण अधिकार प्रभुत्व हुनेछ ।

﴿الْمُلْكُ يَوْمَئِذٍ الْحَقُّ لِلرَّحْمَٰنِ وَكَانَ يَوْمًا عَلَى الْكَافِرِينَ عَسِيرًا﴾

"राज्य त्यस दिन सिद्ध छ दयालुका लागि तथा यो दिन काफ़िरहरूका लागि अत्याधिक कठिन हुनेछ ।" (सूरः अल-फ़ुरकान-२६)

﴿لِّمَنِ الْمُلْكُ الْيَوْمَ لِلَّهِ الْوَاحِدِ الْقَهَّارِ﴾

(अल्लाह तआ़ला सोध्नेछ) "आज कसको राज्य छ ?"

(अनि स्वयं उत्तर दिनेछ) "एक अल्लाह प्रभावीको ।" (सूरः अल-मोमिन-१६)

(५८) तथा जसले अल्लाहको मार्गमा देश छाडे उनी शहीद गरिए अथवा आफ्ना मृत्युले मरे[1] अल्लाह (तआ़ला) उनीहरूलाई उत्तम जीविका प्रदान गर्नेछ[2] तथा अवश्य अल्लाह (तआ़ला) सर्वोत्तम जीविका प्रदान गर्नेवाला छ ।[3]

وَالَّذِينَ هَاجَرُوا فِي سَبِيلِ اللَّهِ ثُمَّ قُتِلُوا أَوْ مَاتُوا لَيَرْزُقَنَّهُمُ اللَّهُ رِزْقًا حَسَنًا ۚ وَإِنَّ اللَّهَ لَهُوَ خَيْرُ الرَّازِقِينَ ﴿٥٨﴾

(५९) उनीहरूलाई अल्लाह (तआ़ला) यस्तो स्थानमा पुऱ्याउने छ कि उनी त्यससित प्रसन्न हुनेछन् ।[4] नि:सन्देह अल्लाह (तआ़ला) जान्नेवाला तथा धैर्यवान छ ।[5]

لَيُدْخِلَنَّهُمْ مُدْخَلًا يَرْضَوْنَهُ ۗ وَإِنَّ اللَّهَ لَعَلِيمٌ حَلِيمٌ ﴿٥٩﴾

(६०) कुरो यही छ,[6] तथा जसले बदला लियो त्यसैको समान जुन उसँग गरिएको थियो अनि यदि उसँग अति गरिन्छ भने

ذَٰلِكَ وَمَنْ عَاقَبَ بِمِثْلِ مَا عُوقِبَ بِهِ ثُمَّ بُغِيَ عَلَيْهِ

[1]अर्थात् त्यसै हिजरतको परिस्थितिमा मृत्यु भयो अथवा शहीद भए ।

[2]अर्थात् स्वर्गका सुख जुन न समाप्त हुनेछन् न नष्ट ।

[3]किनभने त्यो बिना हिसाब, बिना अधिकार माँगिकन तथा बिना प्रश्न गरिकन प्रदान गर्दछ । यसको अतिरिक्त मनुष्य जुन एक-अर्कालाई दिन्छन्, त त्यो उसैले दिएको मध्येबाट दिन्छन्, यसकारण मूल जीविका प्रदान गर्नेवाला त्यही छ ।

[4]किनभने स्वर्गका सुख यस्ता हुनेछन् «مَا لَا عَيْنٌ رَأَتْ، وَلَا أُذُنٌ سَمِعَتْ، وَلَا خَطَرَ عَلَى قلب بَشَر» "जसलाई आजसम्म न कुनै आँखाले देख्यो, न कुनै कानले सुन्यो । तथा (देख्नु, सुन्नु त टाढाको कुरो हो,) कुनै व्यक्तिको मनमा तिनको विचारसम्म आएन ।" तसर्थ यस्ता सुखहरूले परिपूर्ण स्वर्गलाई प्राप्त गरी को प्रसन्न हुनेछैन ?

[5]عليم त्यो पुण्यका कार्य गर्नेवालाहरूको पद तथा उनका श्रेणीहरूलाई राम्ररी जान्दछ । कुफ्र तथा शिर्क गर्नेवालाहरूका अपराध तथा अवहेलनालाई देख्दछ, तर उनलाई तुरुन्त समात्दैन ।

[6]अर्थात् यो कि महाजिरहरूलाई विशेषरूपले शहादत अथवा प्राकृतिक मृत्युमा हामीले जुन वाचा गरेका छौं, त्यो अवश्य पूरा हुनेछ ।

لَيَنْصُرَنَّهُ اللّٰهُ ۭ اِنَّ اللّٰهَ لَعَفُوٌّ غَفُوْرٌ ۝

नि:सन्देह अल्लाह (तआला) स्वयं त्यसको सहायता गर्नेछ ।[1] नि:सन्देह अल्लाह (तआला) छाडिदिनेवाला तथा क्षमा गर्नेवाला छ ।[2]

ذٰلِكَ بِاَنَّ اللّٰهَ يُوْلِجُ الَّيْلَ فِي النَّهَارِ وَيُوْلِجُ النَّهَارَ فِي الَّيْلِ وَاَنَّ اللّٰهَ سَمِيْعٌۢ بَصِيْرٌ ۝

(६१) यो यसकारण कि अल्लाह रातलाई दिनमा प्रवेश गराउँछ तथा दिनलाई रातमा लैजान्छ ।[3] नि:सन्देह अल्लाह तआला सुन्नेवाला, देख्नेवाला छ ।

ذٰلِكَ بِاَنَّ اللّٰهَ هُوَ الْحَقُّ وَاَنَّ مَا يَدْعُوْنَ مِنْ دُوْنِهٖ

(६२) यो सबै यसकारण कि अल्लाह नै सत्य छ ।[4] तथा त्यसका अतिरिक्त जसलाई पनि यिनी पुकार्दछन्

[1] عقوبت त्यस दण्ड अथवा बदलालाई भन्छन्, जुन कुनै कर्मको बदला हुन्छ । अर्थ यो हो कि कसैले कसैलाई ज्यादती गरेको छ भने जोसँग ज्यादती गरिएको छ, त्यसलाई ज्यादती गरिए समान बदला लिने अधिकार छ तर बदला लिए पश्चात, जबकि अत्याचारी तथा नृशंसित दुबै समान भइसकेका हुन्छन्, अत्याचारी नृशंसितमाथि पुन: अत्याचार गर्दछ भने अल्लाह तआला त्यस पीडितको सहायता अवश्य गर्नेछ । अर्थात यो सन्देह नहोस् कि पीडितले क्षमा गर्नुको सट्टा बदला लिएर त्रुटिपूर्ण कार्य गरेको छ, होइन, बरु त्यसको पनि आज्ञा अल्लाहले दिएको छ, यसकारण भविष्यमा पनि त्यो अल्लाहको सहायतको अधिकारी रहनेछ ।

[2] यसमा क्षमा गरिदिनुको पुन: शिक्षा दिएको छ कि अल्लाह क्षमा गर्नेवाला छ, तिमी पनि क्षमाले काम लिउ, एउटा अर्को अर्थ यो पनि हुनसक्छ कि बदला लिनुमा जति अत्याचारीको अत्याचार हुनेछ त्यति अत्याचार गरिनेछ, यसको आज्ञा अल्लाहको तर्फबाट छ, यसकारण यसमा पकड हुनेछैन, बरु त्यो क्षम्य छ । अन्यमा यसलाई अत्याचार तथा अहित त्यसको समरूप हुनुको कारण भनिन्छ । अन्यथा प्रतिशोध अथवा बदला मूलत: अत्याचार तथा त्रुटि छँदैछैन ।

[3] अर्थात् जुन अल्लाह यसप्रकार कार्य गर्न सामर्थ्य राख्दछ, त्यो यस कुराको पनि सामर्थ्य राख्दछ कि त्यसका जुन भक्तहरूमाथि अत्याचार गरिन्छ तिनका बदला त्यो अत्याचारीहरूसित लेओस् ।

[4] यसकारण कि त्यसको धर्म सत्य छ, त्यसको इबादत सत्य छ, त्यसको वचन सत्य छ । त्यसको आफ्ना मित्रहरूलाई उनको शत्रुहरूको अपेक्षा सहायता गर्न सक्दछ, त्यो अल्लाह महिमावान स्वयंममा, आफ्ना गुणहरूमा तथा आफ्ना कर्महरूमा सत्य छ ।

هُوَ الْبَاطِلُ وَاَنَّ اللّٰهَ هُوَ الْعَلِيُّ الْكَبِيْرُ ﴿٦٢﴾

ती असत्य छन् तथा निःसन्देह अल्लाह (तआ़ला) सर्वोच्च महिमावाला छ ।

اَلَمْ تَرَ اَنَّ اللّٰهَ اَنْزَلَ مِنَ السَّمَآءِ مَآءً فَتُصْبِحُ الْاَرْضُ مُخْضَرَّةً ۭ اِنَّ اللّٰهَ لَطِيْفٌ خَبِيْرٌ ﴿٦٣﴾

(६३) के तपाईंले देख्नुभएन कि अल्लाह (तआ़ला) आकाशबाट पानी वर्षाउँछ, त धर्ती हराभरा हुन्छ । वस्तुतः अल्लाह (तआ़ला) कल्याणकारी तथा जान्नेवाला छ ।[1]

لَهٗ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۭ وَاِنَّ اللّٰهَ لَهُوَ الْغَنِيُّ الْحَمِيْدُ ﴿٦٤﴾

(६४) आकाशहरू तथा धर्तीमा जे-जति छ उसैको हो[2] तथा निःसन्देह अल्लाह त्यही हो निस्पृह प्रशंसाहरूवाला भएको ।

اَلَمْ تَرَ اَنَّ اللّٰهَ سَخَّرَ لَكُمْ مَّا فِي الْاَرْضِ وَالْفُلْكَ تَجْرِيْ فِي الْبَحْرِ بِاَمْرِهٖ ۭ وَيُمْسِكُ السَّمَآءَ اَنْ تَقَعَ عَلَى الْاَرْضِ اِلَّا

(६५) के तपाईंले देख्नुभएन कि अल्लाहले नै धर्तीका सबै कुरा तिम्रो वशमा गरिदिएको छ ।[3] तथा त्यसको आदेशले समुद्रमा चल्दै गरेका डुङ्गाहरू पनि । त्यही आकाशलाई रोकेको छ ताकि धर्तीमाथि त्यसको आदेश बिना नढलोस्,[4]

---

[1] لطيف (सूक्ष्मदर्शी) छ, त्यसको ज्ञान प्रत्येक सानो-ठूलो कुरालाई आफ्नो परिधिमा घेरेको छ, अथवा दयावाला छ अर्थात् आफ्ना भक्तहरूको जीविका पुऱ्याउनमा दया तथा कृपाले काम लिन्छ خبير त्यो ती कुराहरूसित सूचित छ जसमा त्यसका भक्तहरूको हित तथा सुधार छ अथवा तिनका आवश्यकता एवं आकांक्षाहरूसित अवगत छ ।

[2] जन्मको आधारमा पनि, राज्यको आधारमा पनि एवं अधिकारमा पनि । यसकारण सम्पूर्ण सृष्टि त्यसको अधीन छ, त्यो कसैको अधीन छैन किनभने त्यो प्रत्येकबाट निस्पृह छ अर्थात् त्यसलाई कुनै पनि वस्तु अथवा अन्यको आवश्यकता छैन । तथा जुन शक्ति सबै गुणहरूले युक्त तथा अधिकारहरूको स्रोत हो, प्रत्येक परिस्थितिमा प्रशंसाको योग्य पनि त्यही छ ।

[3] उदाहरणतः पशु, नदीहरू, वृक्ष तथा (थुप्रै) वस्तुहरू, जसको लाभ मनुष्य प्राप्त गरिराखेको तथा स्वाद लिइराखेको छ ।

[4] अर्थात यदि त्यो चाहन्छ भने आकाश धर्तीमा लड्छ जसबाट धर्तीमा उपस्थित प्रत्येक वस्तु ध्वस्त हुनजान्छ । हो, क़ेयामतको दिन आकाश पनि क्षत-विक्षत हुनसक्छ ।

بِإِذْنِهٖ ؕ إِنَّ اللّٰهَ بِالنَّاسِ لَرَءُوفٌ رَّحِيمٌ ﴿٦٥﴾

नि:सन्देह अल्लाह (तआला) मानिसहरूमाथि विनम्र तथा दयालु छ ।[1]

وَهُوَ الَّذِيٓ أَحْيَاكُمْ ثُمَّ يُمِيتُكُمْ ثُمَّ يُحْيِيكُمْ ؕ إِنَّ الْإِنسَانَ لَكَفُورٌ ﴿٦٦﴾

(६६) तथा उसैले तिमीलाई जीवित गरेको छ, अनि त्यसैले तिमीलाई मार्नेछ, पछि त्यसैले तिमीलाई जीवित गर्नेछ, नि:सन्देह मनुष्य वस्तुत: कृतघ्न छ ।[2]

لِكُلِّ أُمَّةٍ جَعَلْنَا مَنسَكًا هُمْ نَاسِكُوهُ فَلَا يُنَازِعُنَّكَ فِي الْأَمْرِ ۚ وَادْعُ إِلَىٰ رَبِّكَ ۖ إِنَّكَ لَعَلَىٰ هُدًى مُّسْتَقِيمٍ ﴿٦٧﴾

(६७) प्रत्येक सम्प्रदायका लागि हामीले इबादतको एउटा विधि निर्धारित गरिदिएका छौं, जसका तिनी पालन गर्नेवाला छन्,[3] तसर्थ उनीहरूले तपाईंसित यस सम्बन्धमा विवाद गर्नुहुन्न ।[4] तपाईं प्रभुतिर मानिसहरूलाई डाँक्नुस्, नि:सन्देह तपाईं सत्यमार्गमा नै हुनुहुन्छ ।[5]

[1]यसैकारण उसले वर्णित वस्तुहरूलाई मनुष्यका अधीन गरिदिएको छ तथा आकाशलाई पनि उनीमाथि खस्न दिदैन । अधीन गर्नुको अर्थ हो कि ती सबै वस्तुहरूबाट लाभ त्यसको लागि सम्भव अथवा सरल गरिदिएको छ ।

[2]यो जातिवाचक संज्ञाको रूपमा छ । केही मानिसहरूको यस कृतघ्नताबाट निस्केर जानु यसको प्रतिकूल छैन । किनभने अधिकतम मानव जातिमा यो कुफ्र तथा पाप पाईन्छ ।

[3]अर्थात् प्रत्येक युगमा हामीले मानिसहरूका लागि धार्मिक नियम निर्धारित गऱ्यौं जुन केही कुरामा एक-अर्काबाट भिन्न पनि हुन्थे, जस्तो मूसाका सम्प्रदायको लागि इंजील, ईसाका सम्प्रदायका लागि धार्मिक विधान थियो तथा अब कुरआन मुसलमानहरूका धर्म विधान तथा जीवन विधान हो ।

[4]अर्थात् अल्लाहले जुन तपाईंलाई धर्म तथा धार्मिक नियम प्रदान गरेको छ, त्यो पनि वर्णित नियमहरूको आधारमा छ, ती प्राचीन धार्मिक नियमवालाहरूलाई आवश्यक छ कि अब तपाईंका धार्मिक नियमहरूमाथि ईमान ल्याउन, न कि यस कुरामा तपाईंसित विवाद गरून् ।

[5]अर्थात् तपाईं तिनका झगडाको चिन्ता नगर्नुस्, बरु उनलाई आफ्नो प्रभुतिर आमन्त्रित गर्दैरहनुस्, किनभने अब सोझो मार्गमा तपाईं नै अग्रसर हुनुहुन्छ । अर्थात् सबै प्राचीन धार्मिक विधान निरस्त गरिहाले ।

وَإِن جَٰدَلُوكَ فَقُلِ ٱللَّهُ أَعْلَمُ بِمَا تَعْمَلُونَ ﴿٦٨﴾

(६८) तथा तैपनि यदि यी मानिसहरू तपाईंसित बाभ्छन् भने तपाईं भनिदिनुस् कि तिम्रा कर्महरूसित अल्लाह राम्ररी अवगत छ ।

ٱللَّهُ يَحْكُمُ بَيْنَكُمْ يَوْمَ ٱلْقِيَٰمَةِ فِيمَا كُنتُمْ فِيهِ تَخْتَلِفُونَ ﴿٦٩﴾

(६९) तिमी सबैका मतभेदको निर्णय क़यामतका दिन अल्लाह (तआ़ला) स्वयं गर्नेछ ।[1]

أَلَمْ تَعْلَمْ أَنَّ ٱللَّهَ يَعْلَمُ مَا فِى ٱلسَّمَآءِ وَٱلْأَرْضِ ۗ إِنَّ ذَٰلِكَ فِى كِتَٰبٍ ۚ إِنَّ ذَٰلِكَ عَلَى ٱللَّهِ يَسِيرٌ ﴿٧٠﴾

(७०) के तिमीले जानेनौं कि आकाश तथा धर्तीका प्रत्येक कुरो अल्लाहको ज्ञानमा छ । यो सबै लेखिएको किताबमा सुरक्षित छ । अल्लाह (तआ़ला) का लागि यो कार्य अत्यन्त सरल छ ।[2]

---

[1]अर्थात् वर्णन तथा तर्कहरूको प्रकट पश्चात पनि यदि यिनीहरू विरोध तथा विवादबाट रोकिएनन् भने यिनका मामिला (कुरा) अल्लाहलाई सुम्पिदिनुस् तथा भनिदिनुस् कि अल्लाह तआ़ला नै तिम्रा मतभेदको निर्णय क़यामतका दिन गरिदिनेछ, तब त्यस दिन स्पष्ट हुनेछ कि सत्य के हो तथा असत्य के हो ? किनभने त्यो त्यसका अनुसार सबैलाई प्रतिफल दिनेछ ।

[2]यसमा अल्लाह तआ़लाले आफ्नो सम्पूर्ण ज्ञान तथा सृष्टिलाई घेरेको छ । अर्थात् त्यसको सृष्टिलाई जे-जति गर्नु थियो, त्यसलाई त्यसको ज्ञान अघिदेखि नै थियो, त्यो तिनलाई जान्दथ्यो । अतः उसले आफ्नो ज्ञानले यी कुरा अघि नै लेखिदियो । तथा मानिसहरूलाई यो कुरो चाहे जति कठिन लागेपनि, अल्लाहको लागि यो अत्यन्त सरल छ । यो त्यही भाग्यको समस्या हो जसमाथि ईमान राख्नु जरूरी छ । यसलाई हदीसमा यसप्रकार वर्णन गरिएको छ, "अल्लाह तआ़लाले आकाश तथा धर्तीको उत्पत्तिभन्दा ५० हजार वर्ष अघि, जबकि त्यसको अर्श (सिंहासन) पानीमाथि थियो, सृष्टिको भाग्य लेखिदिएको थियो ।" (सहीह मुस्लिम किताबुल क़द्र, बाब हिजाज़ आदम व मूसा) तथा सुननका कथनमा छन्, रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो: "अल्लाह तआ़लाले सर्वप्रथम कलम पैदा गऱ्यो, तथा त्यससित भन्यो लेख, त्यसले भन्यो के लेखूँ ? अल्लाह तआ़लाले भन्यो जे-जति हुनेवाला छ, सबै लेखिदेउ । अतः त्यसले अल्लाहको आदेशले क़यामतसम्म जे-जति हुनेवाला थियो, सबै लेखिदियो ।" (अबू दाऊद किताबुस सुन्नः बाबुन फ़िल क़द्र र तिर्मिजी अबवाबुल क़द्र तफ़सीर सूरः नून, मुसनद अहमद भाग ५/३१७)

وَيَعْبُدُونَ مِن دُونِ اللَّهِ مَا لَمْ يُنَزِّلْ بِهِ سُلْطَانًا وَمَا لَيْسَ لَهُم بِهِ عِلْمٌ وَمَا لِلظَّالِمِينَ مِن نَّصِيرٍ ﴿٧١﴾

(७१) तथा यिनीहरू अल्लाह (तआ़ला) बाहेक तिनीहरूलाई पूजिराखेका छन् जसका कुनै ईश्वरीय प्रमाण छैन तथा न उनीहरू स्वयं नै यसको कुनै स्थान राख्दछन्, अत्याचारीहरूको कोही सहायक छैन ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ تَعْرِفُ فِي وُجُوهِ الَّذِينَ كَفَرُوا الْمُنكَرَ ۖ يَكَادُونَ يَسْطُونَ بِالَّذِينَ يَتْلُونَ عَلَيْهِمْ آيَاتِنَا ۗ قُلْ أَفَأُنَبِّئُكُم بِشَرٍّ مِّن ذَٰلِكُمُ ۗ النَّارُ وَعَدَهَا اللَّهُ الَّذِينَ كَفَرُوا ۖ وَبِئْسَ الْمَصِيرُ ﴿٧٢﴾

(७२) तथा जब उनका समक्ष हाम्रा कथनका स्पष्ट आयतहरूको पाठ गरिन्छ, त्यतिखेर तपाईं काफ़िरहरूका मुखमा अप्रसन्नताका भाव स्पष्ट थाहा पाउनुहुन्छ । उनीहरू निकट आउँछ ताकि हाम्रा आयतहरूलाई सुनाउनेमाथि आक्रमण गर्न सकून् ।[1] भन्नुस् कि म तिमीलाई यसभन्दा पनि अधिक म तिमीलाई अशुभ सूचना दिउँ । त्यो अग्नि हो, जसको वाचा अल्लाहले काफ़िरहरूसित गरिसकेको छ,[2] तथा त्यो अत्यन्त नराम्रो ठाउँ हो ।

يَا أَيُّهَا النَّاسُ ضُرِبَ مَثَلٌ فَاسْتَمِعُوا لَهُ ۚ إِنَّ الَّذِينَ تَدْعُونَ مِن دُونِ اللَّهِ لَن يَخْلُقُوا ذُبَابًا وَلَوِ اجْتَمَعُوا لَهُ ۖ

(७३) हे मानिसहरू ! एउटा उदाहरण दिइँदैछ, अलि ध्यानपूर्वक सुन । अल्लाहका अतिरिक्त तिमी जुन-जसलाई पुकारदै आइराखेका छौ, उनीहरू एउटा झिंगा पनि पैदा गर्न सक्दैनन् यदि सबै

[1]आफ्नै हातले हस्तक्षेप गरेर अथवा अपशब्दले । अर्थात् मूर्तिपूजक अथवा विपथ मानिसहरूका लागि अल्लाहको एकता तथा रिसालत एवं क़ेयामतको वर्णन असहनीय हुन्छ, जसको प्रदर्शन उनका अनुहारबाट तथा कैयन् पटक हात तथा मुखले पनि हुन्छ । यही अवस्था आजकलका धर्ममा नयाँ कुरा सुनाउनेवाला तथा विचलित भएका गुटहरूको छ, जब उनको मार्ग-विचलन क़ुरआन तथा हदीसका तर्कद्वारा प्रकट गरिन्छ, त उनीहरूको पनि व्यवहार क़ुरआनका आयत तथा हदीसका तर्कहरूका समक्ष यस्तै हुन्छ जसको स्पष्टीकरण यस आयतमा गरिएको छ । (फ़तुहल क़दीर)

[2]अर्थात् अहिले त अल्लाहका आयतहरू सुनेर तिम्रा मुखका रङ्ग बदलिन्छन् । तर एउटा आउनेछ कि यदि तिमीले आफ्नो यस व्यवहारबाट क्षमा माँगेनौ भने यसभन्दा कैयन् अधिक नराम्रो अवस्थामा तिमीलाई जानुपर्नेछ, तथा त्यो हो नरक्को आगोमा पोलिनु जसको वाचा अल्लाहले काफ़िर तथा मूर्तिपूजकहरूसित गरेको छ ।

وَإِن يَسْلُبْهُمُ الذُّبَابُ شَيْـًٔا لَّا يَسْتَنقِذُوهُ مِنْهُ ۚ ضَعُفَ الطَّالِبُ وَالْمَطْلُوبُ ﴿٧٣﴾

एकत्रित भएपनि[1] बरु यदि झिंगा उनीहरुबाट कुनै कुरो लिएर भाग्छ भने, यिनीहरु त त्यसलाई पनि त्यसबाट खोस्न सक्दैनन्,[2] अत्यन्त निर्बल छ माँग्नेवाला तथा अत्यन्त क्षीण छ जससित माँगिदैछ ।[3]

مَا قَدَرُوا اللَّهَ حَقَّ قَدْرِهِ ۗ

(७४) उनीहरुले अल्लाहका महिमा अनुसार त्यसको महत्व बुझ्दै-बुझ्दैनन्,[4] निःसन्देह

[1]अर्थात् यी असत्य देवता जसलाई तिमी अल्लाहका अतिरिक्त सहायताका लागि पुकार्दछौ, ती सबै एकत्रित भएर एउटा तुच्छ जीव झींगा बनाउन चाहन्छन् भने बनाउन सक्दैनन् । त यसका उपरान्त पनि तिमी उनलाई आफ्ना कष्टनिवारक ठान्दछौ भने, तिम्रो बुद्धिमाथि शोक छ । यसबाट यो ज्ञात भयो कि अल्लाहका अतिरिक्त जसको इबादत उपासना गरिदै आइरहेको छ, ती पत्थरका निर्जीव मूर्तिहरु मात्रै हुँदैनथे (जस्तो कि आजकल कब्र पूजाको औचित्य भन्ने मानिसहरु सिद्ध गर्न प्रयत्न गर्दछन्) बरु यी बुद्धि एवं समझ राख्ने कुरा पनि थिए। अर्थात अल्लाहका पुण्य कार्य गर्नेवाला भक्त पनि थिए, जसका मृत पश्चात मानिसहरुले उनीहरुलाई अल्लाहका अंशियार बनाए, यसैकारण अल्लाहि तआला भन्दै हुनुहुन्छ कि यी सबै सम्मिलित भएपनि, एउटा तुच्छ वस्तु झिंगा पनि पैदा गर्न सक्दैनन् । मात्र ढुङ्गाका मूर्तिहरुलाई यो चुनौती दिन सकिन्न ।

[2]यो उनको विवशता तथा असमर्थताको अधिक प्रदर्शन हो कि सृष्टि गर्ने कुरा त टाढै छ, यिनीहरु त झिंगालाई समातेर त्यसको मुखबाट त्यो वस्तुपनि लिन सक्दैन जुन त्यो उनीसित खोसेर लग्दछ ।

[3]प्रार्थी (इच्छुक) सित तात्पर्य स्वकृत देवता तथा वान्छितसित तात्पर्य झिंगा अथवा केही विद्वानहरुका निकट प्रार्थीबाट पूजारी तथा वान्छितबाट त्यसको देवता तात्पर्य छ । हदीस कुदसीमा असत्य देवताहरुको शक्तिहीनताको वर्णन यी शब्दहरुमा छ । अल्लाह तआला भन्नुहुन्छ : "त्यसभन्दा अधिक अत्याचारी को होला जो म जस्तै सृष्टि गर्न चाहन्छ ? यदि कसैमा वास्तवमा सामर्थ्य छ भने त्यो होला जो म जस्तै सृष्टि गर्न चाहन्छ ? यदि कसैमा वास्तवमा सामर्थ्य छ भने त्यो एउटा कण अथवा एउटा जुम्रा नै सृष्टि गरेर देखाओस् ।" (सहीह बुख़ारी किताबुल लिवास वाव ला तद्ख़ोलुल मलायेका बैतन फ़ीहे कलबुन वला सूरतुन)

[4]यही कारण छ कि मानिसहरु त्यसका निसहाय सृष्टिलाई त्यसको समतुल्य एवं साझीदार बनाउँछन् । यदि उनीलाई अल्लाह तआलाको महिमा, उच्चता, सामर्थ्य तथा शक्ति एवं उसको असीमताको ठीक-ठीक अनुमान तथा ज्ञान छ भने उनीहरु कहिल्यै त्यसको प्रभुत्वमा कसैलाई सम्मिलित गर्दैनन् ।

إِنَّ اللَّهَ لَقَوِيٌّ عَزِيزٌ ۝٧٤

अल्लाह (तआ़ला) अत्यन्त शक्तिशाली तथा प्रभावशाली छ ।

اللَّهُ يَصْطَفِي مِنَ الْمَلَائِكَةِ رُسُلًا وَمِنَ النَّاسِ ۚ إِنَّ اللَّهَ سَمِيعٌ بَصِيرٌ ۝٧٥

(७५) फरिश्ताहरुमध्ये तथा मनुष्यहरुमध्ये रसूललाई अल्लाह नै चयन गर्दछ ।[1] निःसन्देह अल्लाह (तआ़ला) सुन्नेवाला, देख्नेवाला छ ।[2]

يَعْلَمُ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ ۗ وَإِلَى اللَّهِ تُرْجَعُ الْأُمُورُ ۝٧٦

(७६) त्यो राम्ररी जान्दछ, त्यसलाई जे-जति अगाडी तथा जे-जति उनको पछाडी छ, तथा अल्लाहतिर नै सबै काम फर्काइन्छन् ।[3]

يَا أَيُّهَا الَّذِينَ آمَنُوا ارْكَعُوا

(७७) हे ईमानवालाहरु ! रुकूअ, सजदा (ढोग)

---

[1] رُسُلٌ रसूल (अवतरित, पठाइएको सन्देशवाहक) को बहुवचन हो । अल्लाह तआ़लाले फरिश्ताहरुसित पनि बाहनको अर्थात सन्देशवाहनको काम लिएको छ जस्तै आदरणीय जिब्रीललाई आफ्नो प्रकाशनाका लागि रोज्यो ताकि उनीहरु रसूलका पासमा प्रकाशना पुऱ्याउन अथवा प्रकोप लिएर समुदायहरुको पासमा जाऊन् तथा मनुष्यहरुमध्ये जसलाई चाहयो रिसालतका लागि रोजिहाल्यो तथा उनीहरुलाई मानिसका मार्गदर्शन तथा शिक्षा दिनुका निम्ति नियुक्त गऱ्यो । सबै अल्लाहका भक्त थिए यद्यपि रोजिएका थिए, तर केको लागि ? प्रभुत्वको अधिकारमा साझीदार बनाउनको निम्ति ? जस्तै केही मानिसहरुले उनलाई अल्लाहका अंशियार बनाइहालेका छन् । होइन बरु मात्र अल्लाहका सन्देश पुऱ्याउनका निम्ति ।

[2] त्यो भक्तहरुको कथन सुन्नेवाला हो तथा देख्नेवाला हो अर्थात् त्यो जान्दछ कि रिसालतका योग्य को छ ? जस्तो अन्य स्थानमा भन्यो :

﴿اللَّهُ أَعْلَمُ حَيْثُ يَجْعَلُ رِسَالَتَهُ﴾

"त्यस स्थानलाई त अल्लाह नै अधिक जान्दछ कि कहाँ त्यो आफ्नो दूतत्व राखोस् ।" (सूरः अल-अनआम-२४)

[3] जब सबै कुराको केन्द्रविन्दु अल्लाह नै छ, त मनुष्य त्यसको अवहेलना गरेर कहाँ जान सक्दछ तथा त्यसको यातनाबाट कुन प्रकार बच्न सक्दछ । के त्यसको लागि यो लाभकारी छैन कि त्यो त्यसको अधीनता तथा आज्ञा पालनको मार्ग अपनाएर त्यसको प्रसन्नता प्राप्त गरोस् ? अतः आउने आयतमा त्यसको स्पष्टीकरण भइराखेको छ ।

وَٱسْجُدُوا۟ وَٱعْبُدُوا۟ رَبَّكُمْ وَٱفْعَلُوا۟ ٱلْخَيْرَ لَعَلَّكُمْ تُفْلِحُونَ ۩

गर्दैरह,[1] तथा आफ्नो प्रभुको इबादत (उपासना) मा लागिराख तथा पुण्यका कार्य गर्दैरह ताकि तिमी सफल होउ ।[2]

وَجَٰهِدُوا۟ فِى ٱللَّهِ حَقَّ جِهَادِهِۦ ۚ هُوَ ٱجْتَبَىٰكُمْ وَمَا جَعَلَ عَلَيْكُمْ فِى ٱلدِّينِ مِنْ حَرَجٍ ۚ مِّلَّةَ أَبِيكُمْ إِبْرَٰهِيمَ ۚ هُوَ سَمَّىٰكُمُ

(७८) तथा अल्लाहका मार्गमा त्यसतै धर्मयुद्ध गर जस्तो धर्मयुद्धको औचित्य छ,[3] उसैले तिमीलाई निर्वाचित गरेको छ तथा तिमीमाथि तिम्रै लागि धर्मका विषयमा कुनै कमी गरेन,[4] धर्म आफ्ना पिता[5] इब्राहीमको (स्थापित राख) ।

[1]अर्थात् त्यस नमाज़सित प्रतिबद्ध रह जुन धार्मिक नियममा निर्धारित गरिएको छ । अगाडी इबादतको आदेश आइराखेको छ जसमा नमाज़ सम्मिलित थियो, परन्तु यसको विशेषता तथा महत्वका कारण यसको विशेषरुपले आदेश दियो ।

[2]अर्थात् सफलता अल्लाहको इबादत तथा आज्ञा पालनमा अर्थात् सत्कर्ममा नै छ, न कि अल्लाहको इबादत तथा आज्ञा पालन छोडेर मात्र भौतिक साधन एवं वस्तुहरुको प्राप्ति तथा बाहुल्यमा, जस्तो कि अधिकतर मानिसहरु बुझ्ने गर्दछन् ।

[3]यस धर्मयुद्धबाट तात्पर्य केही विद्वानले त्यो महायुद्ध लिएका छन्, जुन अल्लाहको नामको प्रसारको निम्ति काफ़िर तथा मूर्तिपूजकहरुसित गरिन्छ तथा केहीले अल्लाहका आदेश पालनालाई भनेका छन् । यसमा इन्द्रियहरु तथा शैतानको सामना गर्नुपर्ने हुन्छ तथा केहीले प्रत्येक त्यो प्रयत्न लिएका छन् जुन सत्य एवं सत्यतालाई प्रभावशाली बनाउन र असत्यलाई दमन गर्नको निम्ति गर्नुपर्दछ ।

[4]अर्थात् यस्तो आदेश दिएन जसलाई मानवप्राण सहन गर्न नसकोस् (बरु सानोतिनो कठिनाई प्रत्येक कार्यमा सहनुपर्ने हुन्छ) बरु पूर्वका धार्मिक नियमहरुका केही कठोर आदेश निरस्त गरिदियो । यसका अतिरिक्त मुसलामानहरुका लागि धेरै छुट प्रदान गर्‍यो, जुन पूर्वका धार्मिक नियमहरुमा थिएन ।

[5]अरब इस्माईलका सन्तानहरुमध्येका थिए, यस आधारमा आदरणीय इब्राहीम अरबहरुका पिता थिए तथा अरब बाहेकले पनि आदरणीय इब्राहीमलाई एउटा महान व्यक्तिका रुपमा आदर गर्दथे, जुनप्रकार पुत्र, पिताको आदर गर्दछन्, यसकारण उनी सबैका पिता थिए, यसका अतिरिक्त मुसलमानहरुका पैग़म्बरको (अरब हुनुका नाताले) आदरणीय इब्राहीम पिता थिए, यसकारण मुसलमानहरुका पनि पिता भए । यसकारण भनियो कि यो धर्म इस्लाम जसलाई अल्लाहले तिम्रा निम्ति निर्वाचित गरेको छ, तिम्रा पिता इब्राहीमको धर्म हो, उसैको अनुशरण गर ।

ٱلْمُسْلِمِينَ ۝ مِن قَبْلُ وَفِى هَٰذَا لِيَكُونَ ٱلرَّسُولُ شَهِيدًا عَلَيْكُمْ وَتَكُونُوا۟ شُهَدَآءَ عَلَى ٱلنَّاسِ ۚ فَأَقِيمُوا۟ ٱلصَّلَوٰةَ وَءَاتُوا۟ ٱلزَّكَوٰةَ وَٱعْتَصِمُوا۟ بِٱللَّهِ هُوَ مَوْلَىٰكُمْ ۖ فَنِعْمَ ٱلْمَوْلَىٰ وَنِعْمَ ٱلنَّصِيرُ ۝٧٨

त्यसै (अल्लाह)[1] ले तिम्रो नाम मुसलमान राखेको छ । यस कुरआनभन्दा पूर्व तथा यसमा पनि ताकि पैग़म्बर तिम्रो लागि साक्षी होस् तथा तिमी सबै मानिसहरुका साक्षी बन,[2] तसर्थ तिमीलाई आवश्यक छ कि नमाज़हरु स्थापित गर तथा ज़कात (धर्मदान) तिर्दैगर तथा अल्लाहलाई दृढताले समात, त्यही तिम्रो संरक्षक तथा स्वामी हो तथा कति श्रेष्ठ तथा स्वामी छ तथा कति उत्तम सहायता गर्नेवाला छ ।



[1] هو सर्वनामलाई केही विद्वानले इब्राहीमतिर फर्काएका छन् अर्थात् कुरआनको अवतरण हुनु पूर्व तिम्रो नाम मुस्लिम पनि आदरणीय इब्राहीमले नै राखेका थिए तथा केहीले अल्लाहतिरै फर्काएका छन् अर्थात तिम्रो नाम मुस्लिम राखेको छ ।

[2] यो गवाही (साक्ष्य) केयामतका दिन हुनेछ जस्तो कि हदीसमा छ । (हेर्नुस् सूरः बकरः आयत १४३ को व्याख्या)

# सूरतुल मोमिनून-२३

سُوْرَةُ الْمُؤْمِنُوْنَ

सूर: मोमिनून मक्कामा अवतरित भएको तथा यसमा ११८ आयतहरू तथा ६ रूकूअ छन्।

शुभारम्भ गर्दछु अल्लाहको नामबाट जो अत्यन्त दयालु एवं कृपालु छ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

(१) निःसन्देह ईमानवालाहरूले सफलता प्राप्त गरे।[1]

قَدْ أَفْلَحَ الْمُؤْمِنُوْنَ ①

(२) जो आफ्ना नमाज़मा विनम्रता गर्दछन्।[2]

الَّذِيْنَ هُمْ فِيْ صَلَاتِهِمْ خٰشِعُوْنَ ②

(३) जो ब्यर्थका कुराहरूबाट मुख फर्काउँछन्।[3]

وَالَّذِيْنَ هُمْ عَنِ اللَّغْوِ مُعْرِضُوْنَ ③

[1] فلاح को शाब्दिक अर्थ हो चिर्नु, काट्नु, कृषकलाई पनि فلاح भनिन्छ किनभने त्यो धर्तीलाई चिरफार गरी त्यसमा विउ छर्छ। مُفْلِحٌ (सफल) पनि त्यो हुन्छ जो दुखहरूलाई काट्दै (सहँदै) लक्ष्यसम्म पुग्दछ, अथवा सफलताको मार्ग त्यसको लागि खुल्दछ, त्यसको लागि वन्द हुँदैन। धर्मको दृष्टिले सफल त्यो छ, जो दुनियाँमा छँदा आफ्नो प्रभुलाई प्रसन्न गर्दछ तथा त्यसको प्रतिफल स्वरूप आख़िरतमा अल्लाहको दया तथा कृपाको अधिकारी बन्दछ। त्यसका साथ-साथै सांसारिक सुख-सुविधा पनि उपलब्ध हुन्छ त त्यो अल्लाहको महिमा हो अन्यथा मूल सफलता त आख़िरतकै सफलता हो चाहे दुनियावाला यसका विपरीत सांसारिक सुख-सुविधाहरूबाट सम्पन्नलालाई नै सफलता ठान्दछन्। आयतमा ती ईमानवालाहरूलाई सफलताको शुभ-सूचना दिइएको छ जसमा लिखित गुण हुनेछन्। जस्तै अगाडीको आयत हेर्नुस्।

[2] خشوع बाट तात्पर्य हृदय तथा अंगहरूको एकाग्रता तथा लीनता हो। हार्दिक एकाग्रता यो हो कि नमाज़को स्थितिमा जानी-जानी विचार तथा शंकाहरूबाट हृदयलाई सुरक्षित राखोस् तथा अल्लाहको महिमा तथा महानताको चित्र आफ्नो हृदयमा वसाल्ने प्रयत्न गरोस्। अङ्ग तथा तनमनको एकाग्रता यो हो कि यताउता नहेरुन्, खेलकूद नगरून्, कपाल तथा वस्त्रलाई सिंगार्नमा नलागिरहून्। बरु भय, विनम्रता, तथा चिन्तनको यस्तो अवस्था हो, जस्तो साधारणतया राजा अथवा कुनै ठूलो मान्छेको समक्ष हुन्छ।

[3] لغــــو प्रत्येक त्यो कार्य तथा प्रत्येक त्यो कुरो हो जसको कुनै लाभ नहोस् अथवा त्यसमा सांसारिक अथवा धार्मिक हानिहरू हुन्। यिनीबाट बच्नुको अर्थ हो कि यिनीहरूतिर ध्यान पनि नदिइयोस् न कि तिनलाई अपनाइयोस् अथवा नगरियोस्।

وَالَّذِيْنَ هُمْ لِلزَّكٰوةِ فٰعِلُوْنَ ۝٤

(४) जो ज़कात (धर्मदान) तिर्नेवाला हुन् ।[1]

وَالَّذِيْنَ هُمْ لِفُرُوْجِهِمْ حٰفِظُوْنَ ۝٥

(५) जो आफ्ना गुप्ताङ्गहरूको रक्षा गर्नेवाला हुन् ।

اِلَّا عَلٰٓى اَزْوَاجِهِمْ اَوْ مَا مَلَكَتْ اَيْمَانُهُمْ فَاِنَّهُمْ غَيْرُ مَلُوْمِيْنَ ۝٦

(६) आफ्ना पत्नी तथा स्वामित्वमा रहेका दासीहरूबाहेक, नि:सन्देह यिनी निन्दीत गरिने मध्येका होइनन् ।

فَمَنِ ابْتَغٰى وَرَآءَ ذٰلِكَ فَاُولٰٓئِكَ هُمُ الْعٰدُوْنَ ۝٧

(७) यसका अतिरिक्त जो अन्य खोज्दछन् न सीमा उल्लंघन गर्नेवाला हुन् ।[2]

وَالَّذِيْنَ هُمْ لِاَمٰنٰتِهِمْ وَعَهْدِهِمْ رٰعُوْنَ ۝٨

(८) जो आफ्ना धरोहर तथा वचनको रक्षा गर्नेवाला हुन् ।[3]

وَالَّذِيْنَ هُمْ عَلٰى صَلَوٰتِهِمْ يُحَافِظُوْنَ ۝٩

(९) जो आफ्ना नमाज़हरूको सुरक्षा गर्दछन् ।[4]

اُولٰٓئِكَ هُمُ الْوٰرِثُوْنَ ۝١٠

(१०) यी नै उत्तराधिकारी हुन् ।

[1]यसबाट तात्पर्य केही विद्वानका निकट अनिवार्य ज़कात हो (जसको विवरण अर्थात् त्यसको मात्रा तथा ज़कातको दर यद्यपि मदीनामा भनियो तैपनि) यसको आदेश मक्कामा नै दिइएको थियो तथा केही धर्मविदका निकट यस्ता कर्महरूलाई अपनाउनु हो जसबाट मनको शुद्धि तथा व्यवहार एवं चरित्रको स्वच्छता हो ।

[2]यसबाट ज्ञात भयो कि متعه (मुतआ) को इस्लाममा कदापि आज्ञा छैन । तथा कामवासनाको तृप्तिको लागि केवल दुईटै उचित विधि छन् । पत्नीसित सहवास गरेर अथवा दासीहरूसित कामवासनाको तृप्ति गरेर, बरु अब केवल पत्नी यस कार्यको लागि रहेको छ किनभने परिभाषित दासीको अस्तित्व अहिले समाप्त छ, यद्यपि जतिखेर पनि परिस्थिति उत्पन्न हुन्छन् त पत्नी सरह त्यससित सहवास मान्य हुनेछ ।

[3]أمانات बाट तात्पर्य निर्धारित ड्यूटी (कार्य-कर्तव्य) लाई पूरा गर्नु, गुप्त कुरा तथा मालको सुरक्षा हो तथा वचनहरूको पालनामा अल्लाहसित गरिएका वचन तथा मनुष्यहरूसित गरिएका वचन एवं सन्धि दुबै सम्मिलित छन् ।

[4]अन्तमा पुन: नमाज़हरूको सुरक्षाको सफलताका लागि आवश्यक भनिएको छ, जसबाट नमाज़को महत्व स्पष्ट हुन्छ । परन्तु आज मुसलमानको निकट अन्य पुण्य कर्महरू जस्तै यसको कुनै महत्व विशेष रहेको छैन ।

ٱلَّذِينَ يَرِثُونَ ٱلْفِرْدَوْسَ هُمْ فِيهَا خَٰلِدُونَ ⑪

(११) जो फ़िरदौस (स्वर्गको उच्च श्रेणी) का उत्तराधिकारी हुनेछन्, जहाँ उनीहरू सधैं वास गर्नेछन् ।[1]

وَلَقَدْ خَلَقْنَا ٱلْإِنسَٰنَ مِن سُلَٰلَةٍ مِّن طِينٍ ⑫

(१२) तथा निःसन्देह हामीले मनुष्यलाई सुकेको साह्रो माटोको सारबाट उत्पन्न गर्‍यौं ।[2]

ثُمَّ جَعَلْنَٰهُ نُطْفَةً فِى قَرَارٍ مَّكِينٍ ⑬

(१३) त्यसपछि हामीले त्यसलाई वीर्य बनाएर सुरक्षित स्थानमा राखिदियौं ।[3]

ثُمَّ خَلَقْنَا ٱلنُّطْفَةَ عَلَقَةً فَخَلَقْنَا ٱلْعَلَقَةَ مُضْغَةً فَخَلَقْنَا ٱلْمُضْغَةَ عِظَٰمًا فَكَسَوْنَا ٱلْعِظَٰمَ لَحْمًا ثُمَّ أَنشَأْنَٰهُ خَلْقًا ءَاخَرَ فَتَبَارَكَ ٱللَّهُ

(१४) त्यस पश्चात वीर्यलाई हामीले जमेको रगत बनायौं, अनि त्यस रगतको डल्लोलाई मासुको टुक्रा बनायौं । त्यसपछि मासुको टुक्रामा अस्थिहरू (हड्डीहरू) बनायौं, अनि अस्थिहरूमाथि मासु चढाइदियौं ।[4] त्यसपश्चात एउटा अन्य रूपमा त्यसलाई

[1]यस वर्णित गुणहरूले युक्त ईमानवाला नै सफल हुनेछन् जो स्वर्गका उत्तराधिकारी अर्थात अधिकारी हुनेछन् । स्वर्ग पनि, "जन्नतुल फ़िरदौस", जुन स्वर्गको सर्वोच्च स्थान हो जहाँबाट स्वर्गका नदीहरू निस्कन्छन् (सहीह बुख़ारी किताबुल जिहाद बाबु दर्जातिल मुज़ाहिदीन फी सबीलिल्लाहे व किताबुत् तौहीद बाब वकान अर्शुहू अलल माओ ।

[2]माटोले पैदा गर्नुको अर्थ आदि पुरुष आदमको माटोबाट उत्पत्ति हो अथवा मनुष्य जो भोजन पनि खान्छ त्यो सबै माटोमा नै पैदा हुन्छ, यस आधारमा त्यस वीर्यको मूलतत्व जुन मनुष्यको उत्पत्तिको कारण बन्दछ, माटो नै हो ।

[3]सुरक्षित स्थानबाट तात्पर्य माताको गर्भाशय हो, जहाँ नौं महिनासम्म बच्चा बडो सुरक्षित रूपले पालन हुन्छ ।

[4]यसको केही विवरण सूरः हजमा गुज्रिसकेको छ । यहाँ त्यसलाई पुनः वर्णन गरिएको छ । तैपनि त्यहाँ مُخلقة को जुन वर्णन थियो, यहाँ त्यसको व्याख्या مُضغة लाई अस्थिहरूमा परिवर्तित गर्नु तथा अस्थिहरूलाई मांस पहिराउनु (चढाउनु) बाट गरिएको छ مُضغة मासुलाई अस्थिहरूमा परिवर्तित गर्नुबाट उद्देश्य मानवको ढाँचालाई सुदृढ आधारमा खडा गर्नु हो । किनभने मात्र मासुमा कुनै दृढता तथा कठोरता हुँदैन । परन्तु यदि त्यसलाई मात्र हड्डीहरूको ढाँचा नै बनाएको भए मनुष्यमा त्यो सुन्दरता एवं आकर्षण हुँदैनथ्यो जुन प्रत्येक मानवमा विद्यमान छ । यसकारण ती अस्थिहरूमा एउटा विशेष अनुपात तथा मात्रामा मासु चढाइएको छ कहीं अधिक तथा कहीं कम, ताकि त्यसका आकार-प्रकारमा असन्तुलन एवं भद्दापन उत्पन्न नहोस् । बरु त्यो सुन्दरता एवं आकर्षणको नमूना तथा

أَحْسَنُ الْخَالِقِينَ ﴿١٤﴾

उत्पन्न गरिदियौं ।[1] मंगलमय छ त्यो अल्लाह जो सबभन्दा राम्रो उत्पत्ति गर्नेवाला छ ।[2]

ثُمَّ إِنَّكُم بَعْدَ ذَٰلِكَ لَمَيِّتُونَ ﴿١٥﴾

(१५) यसका पश्चात फेरि तिमी सबै अवश्य मर्नेछौ ।

ثُمَّ إِنَّكُمْ يَوْمَ الْقِيَامَةِ تُبْعَثُونَ ﴿١٦﴾

(१६) अनि क़ेयामतका दिन निःसन्देह तिमी सबै उठाइनेछौ ।

وَلَقَدْ خَلَقْنَا فَوْقَكُمْ سَبْعَ طَرَائِقَ وَمَا كُنَّا عَنِ الْخَلْقِ غَافِلِينَ ﴿١٧﴾

(१७) तथा हामीले तिमीमाथि सात आकाश बनाएका छौं,[3] तथा हामी सृष्टिबाट अचेत छैनौं ।[4]

---

सृष्टिको उत्कृष्ट नमूना हो । यसै कुरालाई कुरआनमा अन्य स्थानमा यसप्रकारले वर्णन गरिएको छ ।

﴿لَقَدْ خَلَقْنَا الْإِنسَانَ فِي أَحْسَنِ تَقْوِيمٍ﴾

"हामीले मनुष्यलाई सुन्दर रूप अर्थात अत्याधिक राम्रो योग अथवा धेरै राम्रो ढाँचामा बनायौं ।" (सुरः अत्तीन-४)

[1]यसबाट तात्पर्य त्यो शिशु हो जो नौं महिना पश्चात एउटा विशेष रूप लिएर माताको गर्भबाट जन्म लिन्छ तथा हिड्ने-डुल्ने शक्तिका साथ सुन्ने तथा देख्ने एवं बोधका शक्तिहरू पनि त्यसका साथ हुन्छन् ।

[2]خالقين यहाँ ती صانعين का अर्थहरूमा छन्, जुन विशेष मात्रामा द्रव्यहरूलाई जोडेर कुनै एउटा वस्तु तयार गर्दछ । अर्थात् ती सबै शिल्पकारहरूमा अल्लाहजस्तो पनि कोही शिल्पी छ, जो यसप्रकार शिल्पकारीको नमूना प्रस्तुत गर्न सकोस् जुन अल्लाह तआलाले मानवको रूपमा प्रस्तुत गरेको छ ? परन्तु सबभन्दा अधिक शुभ तथा मङ्गलमय त्यो अल्लाह नै छ जुन सबै शिल्पकारहरूभन्दा ठूलो तथा सबैभन्दा राम्रो शिल्पकारी छ ।

[3]طرائق बहुवचन हो طريقة को, तात्पर्य आकाश हो । अरबहरू तल-माथि भएको कुरोलाई पनि طريقة भन्दछन् । आकाश पनि तल-माथि छ यसकारण तिनलाई طرائق भन्यो । अथवा طريقة को अर्थ मार्ग हो, आकाश फरिश्ताहरूको आउने-जाने अथवा ताराहरूको घुम्ने मार्ग हो, यसकारण उनीहरूलाई طرائق भनियो ।

[4]خلق बाट तात्पर्य مخلوق हो । अर्थात् आकाशहरूलाई पैदा गरी हामी आफ्नो धर्तीको सृष्टिबाट अचेत भएनौं बरु हामीले आकाशहरूलाई धर्तीमाथि खस्नबाट सुरक्षित राखेका छौं ताकि सृष्टिको नाश नहोस् । अथवा अर्थ यो हो कि हामी सृष्टिका समस्याहरू तथा उनका जीवन उपयोगी आवश्यकताहरूबाट अचेत भएका छैनौं, बरु हामी तिनका प्रबन्ध गर्दछौं । (फ़तहुल क़दीर)

وَأَنزَلْنَا مِنَ السَّمَاءِ مَاءً بِقَدَرٍ فَأَسْكَنَّاهُ فِي الْأَرْضِ ۖ وَإِنَّا عَلَىٰ ذَهَابٍ بِهِ لَقَادِرُونَ ⑱

(१८) तथा हामी एउटा उचित मात्रामा आकाशबाट पानी वर्षाउँछौं,[1] अनि त्यसलाई धर्तीमाथि रोकिदिन्छौं,[2] तथा हामी त्यसलाई लग्नमा निश्चय सामर्थ्यवान छौं ।[3]

فَأَنشَأْنَا لَكُم بِهِ جَنَّاتٍ مِّن نَّخِيلٍ وَأَعْنَابٍ لَّكُمْ فِيهَا فَوَاكِهُ كَثِيرَةٌ وَمِنْهَا تَأْكُلُونَ ⑲

(१९) यसै पानीद्वारा हामी तिम्रा निम्ति खजूर तथा अंगूरहरूका बगैंचा पैदा गर्दछौं ताकि तिम्रा निम्ति तिनीहरूमा धेरै फल हुन्छन्, तिनै मध्येबाट तिमी खान्छौ पनि ।[4]

तथा केही विद्वानहरूले यो भावार्थ वर्णन गरेका छन् कि धर्तीबाट जे-जति उम्रन्छ अथवा प्रवेश गर्दछ, त्यसैप्रकारले जो ओर्लन्छ तथा माथि उक्लिन्छ, सबै त्यसको ज्ञानमा छ तथा प्रत्येक वस्तुमाथि त्यो दृष्टि राख्दछ तथा प्रत्येक स्थानमा त्यो आफ्नो ज्ञानको आधारमा तिमीसँग हुन्छ । (इब्ने कसीर)

[1]अर्थात् न यति अधिक कि विनाश फैलियोस् तथा न यति कम कि पैदावार तथा अन्य आवश्यकताहरूको लागि पर्याप्त नहोस् ।

[2]अर्थात् यो प्रबन्ध पनि गऱ्यो कि सारा पानी परी बगेर नजाओस् बरु हामीले स्रोत, नहर, नदी तथा ताल एवं इनारहरूको रूपमा त्यसलाई सुरक्षित पनि गरेका छौं, (किनकि ती सबैका उद्‌गम पनि आकाशीय वर्षा नै हो) ताकि ती नदीहरूमा जब वर्षा हुँदैन अथवा यस्ता क्षेत्रहरूमा जहाँ वर्षा कम हुन्छ तथा पानीको आवश्यकता अधिक हुन्छ, तिनीहरूबाट पानी प्राप्त गरियोस् ।

[3]अर्थात् जसरी हामीले आफ्नो दया तथा कृपाले पानीको यस्तो विस्तृत प्रबन्ध गरेका छौं, त्यहीं हामीलाई यो पनि सामर्थ्य छ कि पानीको सतहलाई यति तल गरिदियौं कि तिम्रो लागि त्यसलाई प्राप्त गर्न असम्भव भइहालोस् ।

[4]अर्थात् ती बगैंचाहरूमा अंगूर तथा खजूरका अतिरिक्त अन्य धेरै फल हुन्छन् जसको स्वादले तिमी आनन्द प्राप्त गर्दछौ अथवा केही खान्छौ ।

وَشَجَرَةً تَخْرُجُ مِن طُورِ سَيْنَاءَ تَنبُتُ بِالدُّهْنِ وَصِبْغٍ لِّلْآكِلِينَ ﴿٢٠﴾

(२०) तथा त्यो वृक्ष जुन सैना नामक पर्वतमा उम्रन्छ जुन तेल निकाल्छ तथा खानेहरूका लागि सालन (तिउन्) हो ।[1]

وَإِنَّ لَكُمْ فِي الْأَنْعَامِ لَعِبْرَةً ۖ نُّسْقِيكُم مِّمَّا فِي بُطُونِهَا وَلَكُمْ فِيهَا مَنَافِعُ كَثِيرَةٌ وَمِنْهَا تَأْكُلُونَ ﴿٢١﴾

(२१) तिम्रो निम्ति चौपाया पशुहरूमा पनि निकै ठूलो शिक्षा छ । तिनका पेटहरूबाट हामी तिमीलाई (दूध) खुवाउँछौं तथा अन्य पनि धेरै लाभ तिम्रा निम्ति उनीहरूका छन्, उनीहरूमध्ये केहीलाई तिमी खान्छौ पनि ।

وَعَلَيْهَا وَعَلَى الْفُلْكِ تُحْمَلُونَ ﴿٢٢﴾

(२२) तथा उनीमाथि एवं डुङ्गाहरूमा तिमी सवार गराइन्छौ ।[2]

وَلَقَدْ أَرْسَلْنَا نُوحًا إِلَىٰ قَوْمِهِ فَقَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ ۖ أَفَلَا تَتَّقُونَ ﴿٢٣﴾

(२३) निःसन्देह हामीले नूहलाई त्यसका समुदायतिर (रसूल बनाएर) पठायौं । उसले भन्यो हे मेरा जातिका मानिसहरू ! अल्लाहको इबादत (उपासना) गर तथा उसबाहेक तिम्रो कोही पूज्य छैन, के तिमी अल्लाहसित तर्सन्नौं ?

فَقَالَ الْمَلَأُ الَّذِينَ كَفَرُوا مِن قَوْمِهِ مَا هَٰذَا إِلَّا بَشَرٌ مِّثْلُكُمْ يُرِيدُ

(२४) त्यसका समाजका काफिर प्रमुखहरूले स्पष्ट भनिदिए कि यो त तिमी जस्तै मनुष्य हो, यो तिमीमाथि श्रेष्ठता (तथा सम्मान) प्राप्त

[1]यसबाट जैतूनको वृक्ष तात्पर्य छ, जसको रस तेलको रूपमा, फल ब्यंजन (सालन) का रूपमा प्रयोग हुन्छ । (सालन) लाई صبغ (रङ्ग) भनेको छ किनभने रोटी रसमा चोपेर रङ्गाइन्छ । तूर सीना (पर्वत) तथा त्यसका निकटवर्ती क्षेत्र विशेषरूपले यसको उत्तम पैदावारको क्षेत्र हो ।

[2]अर्थात् प्रभुका यी उपहारहरूबाट तिमी लाभान्वित हुन्छौ, के त्यो यस योग्य छैन कि त्यसको कृतज्ञता व्यक्त गर तथा केवल त्यसै एउटाको इबादत (आराधना) तथा आज्ञा पालन गर ?

أَن يَتَفَضَّلَ عَلَيْكُمْ ۚ وَلَوْ شَاءَ اللَّهُ لَأَنزَلَ مَلَائِكَةً مَّا سَمِعْنَا بِهَٰذَا فِي آبَائِنَا الْأَوَّلِينَ ﴿٢٤﴾

गर्न चाहन्छ ।[1] यदि अल्लाहलाई नै स्वीकार भएको भए त कुनै फरिश्तालाई अवतरित गर्थ्यो,[2] हामीले त यसलाई आफ्ना पूर्वजहरूको समयमा सुन्दै सुनेनौं ।[3]

إِنْ هُوَ إِلَّا رَجُلٌ بِهِ جِنَّةٌ فَتَرَبَّصُوا بِهِ حَتَّىٰ حِينٍ ﴿٢٥﴾

(२५) निःसन्देह यस व्यक्तिलाई उन्माद छ, त तिमी त्यसलाई एउटा निर्धारित समयसम्म ढिल (छुट) देउ ।[4]

قَالَ رَبِّ انصُرْنِي بِمَا كَذَّبُونِ ﴿٢٦﴾

(२६) नूहले प्रार्थना गरे कि हे मेरा पालनकर्ता ! यिनीहरूले मलाई झुठ्लाएका छन् । तिमी मेरो सहायता गर ।[5]

[1]अर्थात् यो त तिमी जस्तै मनुष्य हो, यो कसरी नबी तथा रसूल हुनसक्दछ ? तथा यदि यो नबूअत तथा रिसालतको दावी गरिराखेको छ, त यसको मूल उद्देश्य यसबाट तिमीमाथि श्रेष्ठता तथा उच्चता प्राप्त गर्नुछ ।

[2]तथा यदि वास्तवमा अल्लाह आफ्ना रसूलद्वारा हामीलाई यो बुझाउन चाहन्छ कि इबादतका योग्य केवल त्यही छ त त्यसले कुनै फरिश्तालाई रसूल (सन्देशवाहक) बनाएर पठाउँथ्यो न कि कुनै मनुष्यलाई, त्यो आएर हामीलाई एकेश्वरवादको परिभाषा बुझाउँथ्यो ।

[3]अर्थात् यसको एकेश्वरवादको आमन्त्रण एउटा अनौठो आमन्त्रण हो, यसभन्दा अघि हामीले आफ्ना पूर्वजहरूको समयमा त यो सुन्दै सुनेनौं ।

[4]यो हामीलाई तथा हाम्रा पूर्वजहरूका मूर्तिको पूजा गर्नुका कारण मूर्ख तथा निर्बोध ठानिराखेको छ तथा भन्दछ। लाग्छ कि यो स्वयं नै दिवाना (बउलाहा) हो, यसलाई एक समयसम्म छुट (मोहलत) देउ, मृत्युसँगै यसको आमन्त्रण पनि भइहाल्नेछ । अथवा सम्भव छ कि यसको बहुलट्ठीपना समाप्त होस् तथा यस आमन्त्रणलाई छोडिदेओस् ।

[5]साढे नौ सय वर्षसम्म सतर्क गर्नु तथा आमन्त्रण दिनुका पश्चात अन्त्यमा प्रभुसित प्रार्थना गरे : ﴿فَدَعَا رَبَّهُ أَنِّي مَغْلُوبٌ فَانتَصِرْ﴾

"(नूहले प्रभुसित प्रार्थना गरे, म पराजित तथा कमजोर छु, मेरो सहायता गर ।"(सूरः अल-क़मर-१०)

अल्लाह तआलाले प्रार्थना स्वीकार गऱ्यो तथा आदेश दियो कि मेरो संरक्षता तथा निर्देश बमोजिम डुङ्गा बनाउ ।

فَأَوْحَيْنَا إِلَيْهِ أَنِ اصْنَعِ الْفُلْكَ بِأَعْيُنِنَا وَوَحْيِنَا فَإِذَا جَاءَ أَمْرُنَا وَفَارَ التَّنُّورُ فَاسْلُكْ فِيهَا مِن كُلٍّ زَوْجَيْنِ اثْنَيْنِ وَأَهْلَكَ إِلَّا مَن سَبَقَ عَلَيْهِ الْقَوْلُ مِنْهُمْ وَلَا تُخَاطِبْنِي فِي الَّذِينَ ظَلَمُوا إِنَّهُم مُّغْرَقُونَ ﴿٢٧﴾

(२७) त हामीले उनीतिर प्रकाशना पठायौं कि तिमी हाम्रा आँखाका समक्ष हाम्रा प्रकाशना बमोजिम एउटा डुङ्गा बनाउ । जब हाम्रो आदेश आईपुग्छ[१] तथा तन्दूर (तूफान) आइपुग्छ[२] त तिमी हर प्रकारका एक-एक जोडी त्यसमा राख[३] तथा आफ्नो परिवारलाई पनि, तिनीहरूबाहेक जसका विषयमा हाम्रो कुरा अघि गुज्रिसकेको छ ।[४] सावधान ! जुन मानिसहरूले अत्याचार गरेका छन् तिनका विषयमा मसित कुनै कुरा नगर्नू, उनी त सबै डुबाइनेछन् ।[५]

فَإِذَا اسْتَوَيْتَ أَنتَ وَمَن مَّعَكَ عَلَى الْفُلْكِ فَقُلِ الْحَمْدُ لِلَّهِ الَّذِي نَجَّانَا مِنَ الْقَوْمِ الظَّالِمِينَ ﴿٢٨﴾

(२८) जब तिमी तथा तिम्रा साथी डुङ्गामा राम्ररी बसिहाल्नू त भन्नु कि सबै प्रशंसाहरू अल्लाहकै लागि छन् जसले हामीलाई अत्याचारीहरूबाट छुटकारा दिलायो ।

[१]अर्थात् उनका विनाशको आदेश आइपुग्छ ।

[२]तन्दूरमाथि व्याख्या सूरः हूदमा गुज्रिसकेको छ कि उचित कुरो यो छ कि यसबाट तात्पर्य हाम्रो समाजको परिचित तन्दूर होइन जसमा रोटी पकाइन्छ, बरु धर्ती तात्पर्य छ कि सम्पूर्ण धर्ती नै स्रोतहरूमा परिवर्तित भइहाल्यो । धर्तीबाट पानीको मूलहरू समान फुटिहाल्यो । नूहलाई निर्देश दिईदैछ कि जब पानी धर्तीबाट मूलको रूपमा फुटिहालोस्–

[३]अर्थात् जीव, वनस्पति तथा फल प्रत्येकबाट एक-एक जोडी (भाले तथा पोथी) डुङ्गामा राखिहाल ताकि सबैको वंश शेष रहोस् ।

[४]अर्थात् जसको विनाशको निर्णय उनका कुफ्र तथा क्रूरताको कारण भइसकेको छ, जस्तो नूहकी पत्नी तथा उनका पुत्रको ।

[५]अर्थात् जब प्रकोप प्रारम्भ हुनेछ त यी अत्याचारीहरू मध्येबाट कसैमाथि दया गर्नुको आवश्यकता छैन कि तिमी कसैको सिफारिश गर्न प्रारम्भ गरिदेउ, किनभने उनलाई जलमग्न गर्नुको अन्तिम निर्णय भइसकेको छ ।

وَقُل رَّبِّ أَنزِلْنِي مُنزَلًا مُّبَارَكًا وَأَنتَ خَيْرُ الْمُنزِلِينَ ﴿٢٩﴾

(२९) तथा भन्नु हे मेरा प्रभु ![1] मलाई सुरक्षित उतार्नु तथा तिमी नै उत्तमरूपले उतार्नेवाला हौ ।[2]

إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ وَإِن كُنَّا لَمُبْتَلِينَ ﴿٣٠﴾

(३०) नि:सन्देह यसमा ठूला-ठूला निशानीहरू छन्,[3] तथा हामी नि:सन्देह परीक्षा लिनेवाला छौं ।[4]

ثُمَّ أَنشَأْنَا مِن بَعْدِهِمْ قَرْنًا آخَرِينَ ﴿٣١﴾

(३१) अनि उनका पश्चात हामीले अन्य समुदाय पनि पैदा गर्‍यौं ।[5]



[1]डुङ्गमा बसेर अल्लाहको कृतज्ञता व्यक्त गर्नु कि त्यसले अत्याचारीहरूलाई अन्त्यमा जलमग्न गरी उनीहरूबाट छुटकारा प्रदान गर्‍यो तथा डुङ्गालाई सुरक्षित किनारामा लग्नुका निम्ति प्रार्थना गर्नु ।

[2]यसको साथ त्यो दुआ पनि पढियोस् जुन नबी सल्लल्लाहु अलैहि वसल्लम सवारीमा बस्दाखेरी पढ्नुहुन्थ्यो । (सूर: अल-जुख़रूफ़-१३ तथा १४)

[3]अर्थात् नूहको यस बृत्तान्तमा कि ईमानवालाहरूलाई मोक्ष तथा काफ़िरहरूलाई नाश गरियो, निशानीहरू छन् यस कुराको कि नबी जे-जति अल्लाहतिरबाट लिएर आउँछन्, तिनमा उनी साँचो छन् । यसका अतिरिक्त यो कि अल्लाह तआलाको सामर्थ्य प्रत्येक वस्तुमाथि छ तथा सत्य तथा असत्यको संघर्षमा प्रत्येक कुरासित त्यो परिचित छ तथा समय आएपछि त्यसमाथि नोटिस (सूचना) लिन्छ तथा झूठा मानिसहरूको यसप्रकार पकड गर्दछ कि त्यसबाट कोही उम्कन पाउँदैन ।

[4]तथा हामी नबी तथा रसूलद्वारा यो परीक्षा लिंदै आइरहेका छौं ।

[5]अधिकतर व्याख्याकारहरूका निकट नूहका समुदायको पश्चात अल्लाह तआलाले जुन समुदायलाई पैदा गर्‍यो तथा तिनीहरूमाझ रसूल पठायो त्यो 'आद' को समुदाय हो किनकि अधिकतर स्थानमा नूहका समुदायका उत्तराधिकारीका रूपमा 'आद' को समुदाय हो किनकि अगाडी गएर उनको विनाशको विषयमा वर्णन गरिएको छ कि صيحة (जोडदार चिच्चाहट) ले उनलाई समातिहाल्यो तथा यो प्रकोप समूदको समुदायमाथि आएको थियो । केही विद्वानहरूको निकट यो आदरणीय शोएबको समुदाय 'मदयन' का निवासी हुन् कि उनको पनि विनाश ठूलो चित्कारको कारण भयो ।

فَأَرْسَلْنَا فِيهِمْ رَسُولًا مِّنْهُمْ أَنِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ ۖ أَفَلَا تَتَّقُونَ ﴿٣٢﴾

(३२)अनि उनीहरूबीच स्वयं उनीहरू मध्येबाटै रसूल पनि पठायौं[1] ताकि तिमी सबै अल्लाहको इबादत (उपासना) गर, त्यसका अतिरिक्त तिम्रो कोही पूज्य छैन,[2] तिमी किन तर्सन्नौं ?

وَقَالَ الْمَلَأُ مِن قَوْمِهِ الَّذِينَ كَفَرُوا وَكَذَّبُوا بِلِقَاءِ الْآخِرَةِ وَأَتْرَفْنَاهُمْ فِي الْحَيَاةِ الدُّنْيَا مَا هَٰذَا إِلَّا بَشَرٌ مِّثْلُكُمْ يَأْكُلُ مِمَّا تَأْكُلُونَ مِنْهُ وَيَشْرَبُ مِمَّا تَشْرَبُونَ ﴿٣٣﴾

(३३) तथा उसका क़ौमका प्रमुखहरूले,[3] जसले इन्कार गरे र आख़िरतको साक्षात्कारलाई झुठ्लाए तथा जसलाई हामीले सांसारिक जीवनमा सुख प्रदान गरेका थियौं[4] भने कि यो त तिमीजस्तै एउटा मनुष्य हो, जे तिमी खान्छौ, त्यही त्यो पनि खान्छ र जे तिमी पिउँछौ, त्यही यो पनि पिउँछ ।[5]

[1]यो रसूल पनि हामीले उनीहरू मध्येबाट पठायौं जसको पालन-पोषण उनीहरू बीच भएको थियो, जसलाई उनीहरू राम्ररी चिन्दथे, त्यसका परिवार घर तथा जन्म प्रत्येक कुरोसित परिचित थिए ।

[2]उसले आएर सर्वप्रथम त्यही एकेश्वरवादको आमन्त्रण दियो जुन प्रत्येक नबीको आमन्त्रण तथा सतर्क गर्नुको मूल बिन्दु रहिआएको छ ।

[3]यी समाजका मुखिया नै प्रत्येक युगमा नबी तथा रसूल एवं सत्यवादीहरूलाई झुठ्लाउनमा धेरै भाग लिंदै आइरहेका छन्, जसका कारण समाजको बहुमत ईमान ल्याउनवाट वञ्चित रहन्थ्यो किनभने यिनीहरू अत्याधिक प्रभावशाली मानिसहरू हुने गर्दथे, समाज उनैको पछाडी हिंड्नेवाला हुन्थ्यो ।

[4]अर्थात् आख़िरतमा ईमान नहुनु तथा सांसारिक सुख-सुविधाको वैभव, आफ्ना रसूलमाथि ईमान नल्याउनुका यी दुईटा मूल कारण थिए । आज पनि झूठा मानिसहरू यिनै कारणहरूका आधारमा सत्यवादीहरूको विरोध गर्दछन् तथा सत्यको आमन्त्रणवाट मुख फर्काउन्छन् ।

[5]अत: उनीहरूले यो भनेर इन्कार गरिदिए कि यो त हामीजस्तै खाने-पिउने गर्दछन्, यो अल्लाहको रसूल कसरी हुनसक्छ ? जस्तो आज पनि इस्लामका धेरैजसो दावेदारहरूका लागि रसूलको मानवरूप स्वीकार गर्न अत्यन्त कठिन छ ।

وَلَئِنْ أَطَعْتُمْ بَشَرًا مِّثْلَكُمْ إِنَّكُمْ إِذًا لَّخٰسِرُوْنَ ﴿٣٤﴾

(३४) तथा यदि तिमीले आफू जस्तै मनुष्यको अधीनता स्वीकार गऱ्यौ भने निःसन्देह तिमी क्षतिग्रस्त हुन्छौ ।[१]

أَيَعِدُكُمْ أَنَّكُمْ إِذَا مِتُّمْ وَكُنْتُمْ تُرَابًا وَّعِظَامًا أَنَّكُمْ مُّخْرَجُوْنَ ﴿٣٥﴾

(३५) के यो तिमीलाई यस कुराको वचन दिन्छ कि जब तिमी मरेर मात्र माटोमा परिणत हुन्छौ तथा अस्थि (हाड) रहन्छौ, त तिमी पुनः जीवित गरिनेछौ ?

هَيْهَاتَ هَيْهَاتَ لِمَا تُوْعَدُوْنَ ﴿٣٦﴾

(३६) होइन, टाढा तथा धेरै टाढा छ त्यो जसको तिमीलाई वचन दिइन्छ ।[२]

إِنْ هِيَ إِلَّا حَيَاتُنَا الدُّنْيَا نَمُوْتُ وَنَحْيَا وَمَا نَحْنُ بِمَبْعُوْثِيْنَ ﴿٣٧﴾

(३७) जीवन त मात्र सांसारिक जीवन हो जसमा हामी मर्छौं-बाँच्छौं, र हामी पुनः उठाइनेछैनौं ।

إِنْ هُوَ إِلَّا رَجُلٌ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا وَّمَا نَحْنُ لَهٗ بِمُؤْمِنِيْنَ ﴿٣٨﴾

(३८) यो त त्यो व्यक्ति हो जसले अल्लाहमाथि झूठो रचेको छ,[३] हामी त यसमाथि विश्वास गर्नेवाला होइनौं ।

قَالَ رَبِّ انْصُرْنِيْ بِمَا كَذَّبُوْنِ ﴿٣٩﴾

(३९) नबीले प्रार्थना गरे कि प्रभु यिनले झुठ्लाउन

---

[१] त्यो हानि नै हो कि आफूजस्तै मनुष्यलाई रसूल मानेर तिमी त्यसको महत्व एवं सर्वोच्चता स्वीकार गर्नेछौ, किनकि एउटा मनुष्य अर्को मनुष्यभन्दा श्रेष्ठ कसरी हुनसक्छ ? यही त्यो शंका हो जुन रसूललाई मनुष्य हुने कुरो अस्वीकार मस्तिष्कमा रहिआएको छ । यद्यपि अल्लाह तआला जुन मनुष्यलाई रिसालतको लागि रोज्दछ, त त्यो त्यस रिसालत तथा प्रकाशनाका कारण अन्य सबै नबीका अतिरिक्त मनुष्यहरूभन्दा महत्व तथा श्रेष्ठतामा अत्यन्त महत्वपूर्ण एवं सर्वोच्च हुन्छ ।

[२] هيهات जसको अर्थ 'टाढा' हो, दुईपटक जोड दिनको लागि छ ।

[३] अर्थात पुनः जीवित हुनुको वाचा, यो एउटा मनगढन्त झुठ हो जुन यो व्यक्ति अल्लाहसित जोडिराखेको छ ।

कुरामा तिमी मेरो सहायता गर ।[1]

قَالَ عَمَّا قَلِيلٍ لَّيُصْبِحُنَّ نَادِمِينَ ﴿٤٠﴾

(४०) उत्तर प्राप्त भयो कि यिनीहरू अत्यन्त शीघ्र नै आफूले गरिएका कुरामा पछुताउन थाल्नेछन् ।[2]

فَأَخَذَتْهُمُ الصَّيْحَةُ بِالْحَقِّ فَجَعَلْنَاهُمْ غُثَاءً فَبُعْدًا لِّلْقَوْمِ الظَّالِمِينَ ﴿٤١﴾

(४१) अन्तमा न्यायका नियम अनुसार चर्को स्वरले[3] उनीहरूलाई समातिहाल्यो तथा हामीले उनीहरूलाई कसिंगर बनाइदियौं,[4] तसर्थ अत्याचारीहरूका लागि टाढा होस् ।

ثُمَّ أَنشَأْنَا مِن بَعْدِهِمْ قُرُونًا آخَرِينَ ﴿٤٢﴾

(४२) अनि उनका पश्चात हामीले अन्य सम्प्रदाय पनि पैदा गर्‍यौं ।[5]

مَا تَسْبِقُ مِنْ أُمَّةٍ أَجَلَهَا

(४३) न त कुनै समुदाय आफ्नो समयभन्दा

---

[1]अन्त्यमा आदरणीय नूहको जस्तै यस ईशदूत (पैग़म्बर) ले पनि अल्लाहको सदनमा सहायताको निम्ति हात फैलाए ।

[2] عَمَّا मा مَا अधिक छ जुन विभक्ति तथा संज्ञाको मध्यकालको कमीमाथि जोड दिनका लागि प्रयोग भएको छ । जस्तै ﴿ فَبِمَا رَحْمَةٍ مِّنَ اللَّهِ ﴾ (सूर: आले-इमरान-१५९ मा مَا अधिक छ अर्थात् अतिशीघ्र प्रकोप आउनेवाला छ जसमा यिनीहरू पछुताउने छन् । तर त्यतिखेर पश्चातापबाट कुनै लाभ हुने छैन ।

[3]यो 'चित्कार' भनिन्छ कि आदरणीय जिब्रीलको थियो, केही विद्वान भन्दछन् कि त्यसै ठूलो चर्को स्वर थियो जसका साथ प्रचण्ड आँधिहरू थिए । दुबैले मिलेर उनलाई एकैछिनमा विनष्ट गरिदिए ।

[4] غُثَاءً त्यस कसिंगरलाई भन्दछन् जुन बाढीको पानीसँग हुन्छ, जसमा वृक्षहरूका खोक्रा, सुख्खा हाँगा, साना-साना टुक्रा यसैप्रकार अन्य वस्तुहरू हुन्छन् । जब बाढीको जोड कम हुन्छ त यिनी पनि काम नलाग्ने रूपमा रहेका हुन्छन् । यही दशा ती झुठ्लाउने तथा घमण्डीहरूको थियो ।

[5]यसवाट तात्पर्य आदरणीय स्वालेह आदरणीय लूत तथा आदरणीय शोएबका समुदाय हुन् किनभने सूर: अल-आराफ तथा सूर: हूदमा यसै क्रममा यी घटनाहरूको वर्णन قرون छ । केही विद्वानहरूका निकट इस्राईलको सन्तान तात्पर्य छ । बहुवचन हो قرن तथा यो समुदायको अर्थमा प्रयोग भएको छ ।

وَمَا يَسْتَأْخِرُونَ ﴿٤٣﴾

न अगाडी बढ्यो तथा न पछाडी रहयो ।[1]

ثُمَّ أَرْسَلْنَا رُسُلَنَا تَتْرَا كُلَّمَا جَاءَ أُمَّةً رَّسُولُهَا كَذَّبُوهُ فَأَتْبَعْنَا بَعْضَهُم بَعْضًا وَجَعَلْنَاهُمْ أَحَادِيثَ فَبُعْدًا لِّقَوْمٍ لَّا يُؤْمِنُونَ ﴿٤٤﴾

(४४) त्यस पश्चात हामीले निरन्तर रसूल पठायौं,[2] जुन समुदायको पास जब-जब त्यसको रसूल आयो त्यसले झुठलायो, त हामीले एउटालाई अर्कोको पछाडी लगाइदियौं[3] तथा उनीहरूलाई कहानी बनाइदियौं,[4] तसर्थ उनीहरूका लागि दूरी होस् जो ईमान स्वीकार गर्दैनन् ।

ثُمَّ أَرْسَلْنَا مُوسَىٰ وَأَخَاهُ هَارُونَ بِآيَاتِنَا وَسُلْطَانٍ مُّبِينٍ ﴿٤٥﴾

(४५) अनि हामीले मूसा तथा उसको भाइ हारूनलाई आफ्ना निशानीहरू तथा स्पष्ट तर्क[5] का साथ पठायौं ।

إِلَىٰ فِرْعَوْنَ وَمَلَئِهِ فَاسْتَكْبَرُوا وَكَانُوا قَوْمًا عَالِينَ ﴿٤٦﴾

(४६) फ़िरऔन तथा त्यसका सेनातिर, तर उनीहरूले घमण्ड गरे तथा उनीहरू थिए नै अभिमानी मानिसहरू ।[6]

---

[1]अर्थात् यी सबै समुदाय पनि नूहको समुदाय तथा 'आद' का जस्तै जव यिनका विनाशको निर्धारित समय आइपुग्यो त ध्वस्त भइहाल्यो । एक क्षण अगाडी-पछाडी भएन । जस्तो अल्लाहको आदेश छ :

﴿ إِذَا جَاءَ أَجَلُهُمْ فَلَا يَسْتَأْخِرُونَ سَاعَةً وَلَا يَسْتَقْدِمُونَ ﴾

[2] تترا को अर्थ हो एउटा पश्चात अर्को, निरन्तर तथा क्रमबद्ध ।

[3]बर्बादी तथा विनाशमा । अर्थात् जसरी निरन्तर रसूल आए, त्यसरी रिसालतलाई झुठ्लाउनमा यी समुदाय एउटाको पश्चात अर्को प्रकोपबाट ग्रसित हुँदैरहे तथा विनष्ट हुँदैरहे ।

[4]जुनप्रकार أعاجيب बहुवचन हो أعجوبة को (विस्मयकारी वस्तु अथवा आश्चर्यजनक कुरो) त्यसैप्रकार أحاديث बहुवचन हो أحدوثة का, अर्थ हो मूर्खहरूबाट सुनिएका घटना तथा कथाहरू ।

[5]आयतसित तात्पर्य ती नौं आयत (निशानीहरू) हुन् जसका वर्णन सूरः आराफमा छ, जसका व्याख्या भइसकेछ तथा سلطان مبين सित तात्पर्य खुल्ला प्रमाण तथा तर्क एवं निशानीहरू (प्रतीक) हुन् जसका कुनै उत्तर फ़िरऔन एवं त्यसका दरबारियाहरूबाट आउन सकेन ।

[6]गर्व तथा आफूलाई ठूला ठान्नु, यसको आधारभूत कारण त्यही आख़िरतमा विश्वास गर्नुबाट इन्कार तथा सांसारिक सुख-सुविधाको प्रचुरता नै थियो, जसको वर्णन पूर्वका समुदायहरूका घटनाहरूमा व्यक्त भइसकेको छ ।

فَقَالُوٓا أَنُؤۡمِنُ لِبَشَرَيۡنِ مِثۡلِنَا وَقَوۡمُهُمَا لَنَا عَٰبِدُونَ ﴿٤٧﴾

(४७) भन्नथाले, के हामी आफूजस्तै दुई व्यक्तिहरूमाथि ईमान ल्याऔं ? जबकि स्वयं तिनको समुदाय हाम्रो अधीन छ ।[1]

فَكَذَّبُوهُمَا فَكَانُوا مِنَ ٱلۡمُهۡلَكِينَ ﴿٤٨﴾

(४८) त उनीहरूले ती दुबैलाई झुठ्लाए, अन्तमा उनीहरू पनि विनाशप्राप्त मानिसहरूमा सम्मिलित भए ।

وَلَقَدۡ ءَاتَيۡنَا مُوسَى ٱلۡكِتَٰبَ لَعَلَّهُمۡ يَهۡتَدُونَ ﴿٤٩﴾

(४९) तथा हामीले त मूसालाई किताब पनि दियौं ताकि मानिसहरू सोझो मार्गमा आइहालून् ।[2]

وَجَعَلۡنَا ٱبۡنَ مَرۡيَمَ وَأُمَّهُۥٓ ءَايَةً وَءَاوَيۡنَٰهُمَآ إِلَىٰ رَبۡوَةٍ ذَاتِ قَرَارٍ وَمَعِينٍ ﴿٥٠﴾

(५०) तथा हामीले मरियमका पुत्र तथा त्यसकी मातालाई एउटा निशानी बनायौं,[3] तथा ती दुबैलाई उच्च, स्वच्छ स्थिरता भएको तथा प्रवाहित पानी[4] भएको स्थानमा शरण दियौं ।

[1]यहाँ पनि इन्कारको तर्क उनीहरूले आदरणीय मूसा तथा हारूनको 'मानव' हुनु नै प्रस्तुत गरे तथा त्यसै मनुष्य हुनुमाथि जोड दिनका लागि उनीहरूले भने कि यी दुबै त्यसै समुदायका व्यक्ति हुन् जो हाम्रा दास छन् ।

[2]इमाम इब्ने कसीर भन्नुहुन्छ कि आदरणीय मूसालाई तौरात फिरऔंन तथा त्यसका अनुयायीहरूलाई जलमग्न गर्नुका पश्चात प्रदान गरियो तथा तौरात अवतरित भए पश्चात अल्लाह तआलाले कुनै समुदायलाई सामुहिक रूपले प्रकोपद्वारा नाश गरेन बरु मुसलमानहरूलाई यो आदेश दिंदै गरियो कि उनी काफ़िरहरूसित धर्मयुद्ध गरून् ।

[3]किनकि आदरणीय ईसाको जन्म बिना पिता भयो जो अल्लाहको शक्तिको प्रतीक हो, जसरी आदमलाई बिना माता-पिता तथा हव्वालाई बिना माता आदरणीय आदमबाट तथा अन्य सबै मनुष्यहरूलाई माता-पिताको समागमबाट पैदा गर्नु उहाँका निशानीहरू मध्येबाट हुन् ।

[4] ربوة (उच्च स्थान) बाट वैतुल मोकद्दस तथा مَعِين (प्रवाहित स्रोत) त्यो स्रोत तात्पर्य छ जुन एउटा कथनको आधारमा ईसाको जन्मका समय अल्लाहले अप्राकृतिक रूपले आदरणीय मरियमका खुट्टामुनिबाट प्रवाहित गरेको थियो जस्तो कि सूरः मरियममा व्यक्त भयो ।

(५१) हे पैग़म्बर ! हलाल (वैध) कुराहरू खाउ तथा पुण्यका कार्य गर ।[1] तिमी जे-जति गरिराखेका छौ त्यसबाट राम्ररी अवगत छु ।

يَٰٓأَيُّهَا ٱلرُّسُلُ كُلُوا۟ مِنَ ٱلطَّيِّبَٰتِ وَٱعْمَلُوا۟ صَٰلِحًا ۖ إِنِّى بِمَا تَعْمَلُونَ عَلِيمٌ ﴿٥١﴾

[1] طيبات सित तात्पर्य पवित्र एवं स्वादिष्ट कुराहरू हुन्, केही विद्वानले यसको अनुवाद (उचित) कुराहरू गरेका छन् । दुबै आफ्ना ठाउँमा उचित छन् किनभने प्रत्येक पवित्र वस्तु अल्लाहले उचित (हलाल) गरेको छ तथा प्रत्येक उचित (हलाल) वस्तु पवित्र एवं स्वादिष्ट छ । अपवित्रलाई अल्लाह तआलाले अवैध (हराम) गरेको छ कि तिनी प्रभाव तथा परिणामका आधारमा पवित्र छैनन् चाहे अपवित्र भोजन गर्नेलाई समाजमा आफ्ना सामाजिक रीति तथा व्यवहारका कारण तिनमा एक प्रकार स्वाद नै प्रतीत होस् । पुण्य कार्य त्यो हो जुन कुरआन तथा हदीसमा वर्णित धार्मिक नियमहरूका आधारमा गरियोस्, न कि त्यो जुन मानिसहरूलाई राम्रो प्रतीत होस् किनकि मानिसहरूलाई धार्मिक नियमहरूमा नयाँ कुराको मिश्रण पनि राम्रो लाग्दछ । बरु धर्ममा परिवर्तन गरी नयाँ कुराको मिश्रण गर्नेवालाकहाँ नवीनताको जति महत्व छ त्यति त धार्मिक रूपले अनिवार्य तथा सुन्नतद्वारा प्रमाणित कार्यहरूको पनि छैन । हलाल खानुका साथ पुण्य कार्यहरु गर्नबाट ज्ञात हुन्छ कि यिनको आपसमा घनिष्ट सम्बन्ध छ तथा एक-अर्काका पूरक हुन् । हलाल खानुबाट पुण्यका कार्य गर्नुमा सरलता पुण्य कार्य गर्नेवाला व्यक्तिलाई हलाल खानुको निम्ति बाध्य हुनुपर्दछ । तथा त्यसैमा सन्तोष गर्नुको पाठ सिकाउँछ । यसैकारण अल्लाहले सबै पैग़म्बरहरूलाई यी दुबै कुराको आदेश दिएको छ । अतः सबै पैग़म्वरले परिश्रम गरी दुबै कुराको आदेश दिएको छ । अतः सबै पैग़म्वरे परिश्रम गरी हलाल धन कमाउन तथा खानको प्रबन्ध गर्दैरहे, जुनप्रकार आदरणीय दाऊदको विषयमा चर्चित छ «كَانَ يَأْكُلُ مِنْ كَسْبِ يَدِهِ» सहीह बुख़ारी अल-बायू बाब कस्बुर रजुले व अमलिहि बेयदेही) "आफ्ना हातको कमाइबाट खान्थे ।" तथा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : "प्रत्येक नबीले बाखा चराएका छन्, मैले पनि मक्कावासीहरूको बाखा केही परिश्रमिकमा चराउँदै आएको छु ।" (सहीह बुख़ारी किताबुल इजारत, बाबु राअयिल गनमे अला करारीत) आजकल ब्ल्याकमेलर, स्मगलर, घूस तथा ब्याज खानेहरू एवं अन्य हराम खानेहरूले मेहनत मजदूरी गरी हलाल धन कमाउनेहरूलाई तुच्छ तथा निम्न श्रेणीमा राखिदिएका छन्, जबकि वास्तविक रूपले धर्ममा यसको विपरीत छ । एउटा इस्लामी समाजमा हराम खानेवालाहरूका लागि मान-सम्मानको कुनै ठाउँ छैन चाहे तिनी विश्वका जति पनि ठूला कोषका स्वामी किन नहोऊन् । आदर तथा सम्मानका अधिकारी केवल ती व्यक्ति हुन् जो श्रम गरी हलाल धन खान्छन्, चाहे उनीलाई रूखा-सुखा (साधारण) नै किन खान नपरोस् । यसकारण नबी सल्लल्लाहु अलैहि वसल्लमले यसमा बडो जोड दिनुभएको छ तथा भन्नुभएको छ कि अल्लाह तआला हराम कमाइवालाको दान स्वीकार गर्दैन तथा त्यसको दुआ (प्रार्थना) पनि स्वीकार गर्दैन । (सहीह मुस्लिम, किताबुज़ ज़कात बाबु कबूलिस्सदक़ते मिनल कस्बित्तैयबे)

وَإِنَّ هَٰذِهِۦٓ أُمَّتُكُمۡ أُمَّةٗ وَٰحِدَةٗ وَأَنَا۠ رَبُّكُمۡ فَٱتَّقُونِ ۝٥٢

(५२) नि:सन्देह तिम्रो यो धर्म एउटै धर्म हो[1] तथा म नै तिमी सबैका प्रभु हूँ, तसर्थ तिमी मसित तर्सदै गर।

فَتَقَطَّعُوٓاْ أَمۡرَهُم بَيۡنَهُمۡ زُبُرٗاۖ كُلُّ حِزۡبِۭ بِمَا لَدَيۡهِمۡ فَرِحُونَ ۝٥٣

(५३) त्यस पश्चात उनीहरू स्वयं (नै) आफ्नो कुरा (धर्म) का आपसमा टुक्रा-टुक्रा गरिहाले, प्रत्येक सम्प्रदाय त्यससित जे-जति छ, त्यसैमाथि गर्व गरिराखेको छ।

فَذَرۡهُمۡ فِي غَمۡرَتِهِمۡ حَتَّىٰ حِينٍ ۝٥٤

(५४) तसर्थ तपाईं पनि उनीहरूलाई आफ्नो अचेतन अवस्थामा केही समय छाडिदिनुस्।[2]

أَيَحۡسَبُونَ أَنَّمَا نُمِدُّهُم بِهِۦ مِن مَّالٖ وَبَنِينَ ۝٥٥

(५५) के यिनीहरू (यसप्रकार) भन्ठान्ने छन् कि हामी जे-जति पनि उनका धन तथा सन्तान वृद्धि गरिराखेका छौं।

نُسَارِعُ لَهُمۡ فِي ٱلۡخَيۡرَٰتِۚ بَل لَّا يَشۡعُرُونَ ۝٥٦

(५६) उनीहरू तिनका लागि भलाईहरूमा शीघ्रता गरिराखेका छन्? होइन, बरु यिनीहरू बुझ्दै-बुझ्दैनन्।

إِنَّ ٱلَّذِينَ هُم مِّنۡ خَشۡيَةِ رَبِّهِم مُّشۡفِقُونَ ۝٥٧

(५७) नि:सन्देह जो आफ्ना प्रभुको भयले तर्सन्छन्।

وَٱلَّذِينَ هُم بِـَٔايَٰتِ رَبِّهِمۡ يُؤۡمِنُونَ ۝٥٨

(५८) तथा जो आफ्नो प्रभुको आयतहरूमा ईमान राख्दछन्।

---

[1] أُمَّةٌ सित तात्पर्य धर्म हो, तथा एक हुनुको अर्थ यो हो कि सबै नबीहरूले एक अल्लाहको इबादत (पूजा) को आमन्त्रण दिएका छन्, परन्तु मानिसहरू एकेश्वरवादलाई छाडि अलग-अलग गुट तथा सम्प्रदायहरूमा विभाजित भएका छन्। तथा प्रत्येक गुट आफ्नो विश्वास तथा कर्ममा प्रसन्न छ चाहे त्यो सत्यबाट जति नै टाढा भएको होस्।

[2] غمرة अधिक जलको मात्रालाई भन्दछन् जो धर्तीलाई छोप्दछ। विचलनका मार्ग पनि यति अन्धकारमय हुन्छन् कि त्यसमा घेरिएका मनुष्यको दृष्टिबाट सत्य ओझेल नै रहन्छ। غمرة सित तात्पर्य आश्चर्य, विस्मय, अचेत तथा अपमान हो, आयतमा धम्कीको आधारमा यिनलाई छाड्नुको आदेश छ, उद्देश्य, भाषण तथा शिक्षाबाट रोक्नु होइन।

وَالَّذِينَ هُمْ بِرَبِّهِمْ لَا يُشْرِكُونَ ۝٥٩

(५९) तथा जो आफ्ना प्रभुसित कसैलाई साझी (अंशियार) बनाउँदैनन् ।

وَالَّذِينَ يُؤْتُونَ مَا آتَوْا وَقُلُوبُهُمْ وَجِلَةٌ أَنَّهُمْ إِلَىٰ رَبِّهِمْ رَاجِعُونَ ۝٦٠

(६०) तथा जो मानिसहरू जे-जति दिन्छन् तथा उनका हृदय काँप्छन् कि उनी आफ्ना प्रभुतिर फर्कि जानुपर्छ ।[1]

أُولَٰئِكَ يُسَارِعُونَ فِي الْخَيْرَاتِ وَهُمْ لَهَا سَابِقُونَ ۝٦١

(६१) यी नै हुन् जो शीघ्र-शीघ्र पुण्य प्राप्त गरिराखेका छन् तथा यी नै हुन् जो त्यतातिर दौडेर जानेवाला हुन् ।

وَلَا نُكَلِّفُ نَفْسًا إِلَّا وُسْعَهَا وَلَدَيْنَا كِتَابٌ يَنْطِقُ بِالْحَقِّ وَهُمْ لَا يُظْلَمُونَ ۝٦٢

(६२) हामी कुनै प्राणीलाई त्यसको शक्तिभन्दा अधिक भार (बोझ) दिंदैनौं,[2] हाम्रो पासमा एउटा किताब छ जो सत्य नै बोल्छ, उनीमाथि अलिकति पनि अत्याचार हुने छैन ।

بَلْ قُلُوبُهُمْ فِي غَمْرَةٍ مِنْ هَٰذَا وَلَهُمْ أَعْمَالٌ مِنْ دُونِ ذَٰلِكَ هُمْ لَهَا عَامِلُونَ ۝٦٣

(६३) बरु उनका हृदय त्यताबाट अचेत छन् तथा उनका लागि यसका अतिरिक्त पनि धेरै कर्म छन्[3] जसलाई उनीहरू गर्नेवाला छन् ।

[1]अर्थात् अल्लाहको मार्गमा व्यय गर्दछन् तर अल्लाहसित तर्सि पनि राख्छन् कि कुनै आलस्य तथा त्रुटिका कारण हाम्रो कर्म अथवा दान अस्वीकार नहोस् । हदीसमा चर्चित छ, आदरणीय आयशाले सोध्नुभयो, "तर्सनेवाला को हुन् ? तिनीहरू जो मदिरा पिउँछन्, कुकर्म अथवा चोरी गर्दछन् ?" नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, होइन बरु यिनी ती मानिसहरू हुन् जो नमाज़ पढ्दछन्, रोज़ा (ब्रत) बस्दछन् तथा दान-पुण्य गर्दछन्, परन्तु तर्सिरहन्छन् कि कहीं यो अस्वीकार नभइहालोस् । (तिर्मिज़ी तफ़सीर सूर: अल-मोमिनून तथा मुसनद अहमद ६/१६० तथा १९५)

[2]यस्तै आयत सूर: अल-बक़र: को अन्तमा गुज्रिसकेको छ ।

[3]अर्थात् शिर्क (मूर्तिपूजा तथा अल्लाहका अतिरिक्त कुनै अन्यको इबादत गर्नु) का अतिरिक्त अन्य महापाप अथवा ती कर्म तात्पर्य हुन् जुन ईमानवालाहरूको कर्म (अल्लाहको भय तथा एकेश्वरवादमा ईमान आदि) का विपरीत हुन् । तैपनि भावार्थ दुबैको एउटै छ ।

حَتّٰٓى اِذَآ اَخَذْنَا مُتْرَفِيْهِمْ بِالْعَذَابِ اِذَا هُمْ يَجْـَٔرُوْنَ ﴿٦٤﴾

(६४) यहाँसम्मकि जब हामीले तिनका सम्पन्न मानिसहरूलाई यातनामा जकडिहाल्यौं[1] त उनीहरूविलाप गर्नथाले ।

لَا تَجْـَٔرُوا الْيَوْمَ ۫ اِنَّكُمْ مِّنَّا لَا تُنْصَرُوْنَ ﴿٦٥﴾

(६५) आज रोदन-विलाप नगर, नि:सन्देह तिमी हाम्रा समक्ष सहायता गरिने छैनौं ।[2]

قَدْ كَانَتْ اٰيٰتِيْ تُتْلٰى عَلَيْكُمْ فَكُنْتُمْ عَلٰٓى اَعْقَابِكُمْ تَنْكِصُوْنَ ﴿٦٦﴾

(६६) मेरा आयत त तिम्रा समक्ष पढिन्छन्,[3] तैपनि तिमी आफ्नो कुरकुच्चाको बलमा पछाडी फर्कि भाग्दथ्यौ ।[4]

---

[1] مُترفين सित तात्पर्य सुख-सुविधा प्राप्त (सम्पन्न) मानिसहरू हुन् । प्रकोप त धनवान तथा निर्धन दुबैमाथि हुन्छ तर धनवानहरूका नाम विशेषरूपले यसकारण लिएको छ कि समाजको नेतृत्व साधारणतया यिनैको हातमा हुन्छ, तिनीहरू जुनप्रकारले चाहन्छन्, समाजको मुख फर्काउन सक्छन् । यदि तिनीहरू अल्लाहका आदेशको अवहेलनाको मार्ग अपनाउँछन् तथा त्यसमा दृढतापूर्वक डटेका हुन्छन् भने उनैका देखासेखी समाजका मानिसहरू पनि दृढ हुन्छन् तथा क्षमा एवं खेद व्यक्त गर्नतिर आउँदैनन् । यहाँ مُترفين सित तात्पर्य ती काफ़िर हुन् जसलाई धन-दौलतले परिपूर्ण तथा सन्तान एवं सेवक प्रदान गरेर अवसर दिइयो । जस्तो कि केही आयतहरूका पूर्व तिनको वर्णन गरिएको छ । अथवा तात्पर्य चौधरी नेता किसिमका मानिसहरू हुन् । तथा प्रकोपसित तात्पर्य यदि सांसारिक छ भने बद्रका युद्धमा जुन मक्काका काफ़िर मारिए वरु नबी सल्लल्लाहु अलैहि वसल्लमका शापका परिणामस्वरूप भाक तथा अकालका प्रकोप आइपुगेको थियो त्यो तात्पर्य छ अथवा आख़िरतको यातना हो । परन्तु यो पूर्वका वाक्यक्रमबाट टाढा छ ।

[2] अर्थात् संसारमा अल्लाहको यातना भोग्नुको पश्चात कुनै चित्कार, पुकार तथा करूणा, दयाको विन्ति उनीहरूलाई अल्लाहको पकडबाट मुक्त गर्न सक्दैन । यसैप्रकार आख़िरतको यातनाबाट मुक्त गराउने अथवा सहायता गर्नेवाला कोही हुनेछैन ।

[3] अर्थात् कुर्आन मजीद अथवा अल्लाहका आदेश जसमा पैग़म्बरका कथनी करणी पनि सम्मिलित छन् ।

[4] نُكـوص को अर्थ हो رجعت قهقرى (उल्टो खुट्टा फर्काइ फर्किनु) तर रुपकको रूपमा मुख फर्काउनु तथा फर्कनुको अर्थ तथा भावार्थमा प्रयोग हुन्छ । अर्थात् अल्लाहका आदेश सुनेर तिमी मुख फर्काउन्थ्यौ तथा त्यसबाट भाग्दथ्यौ ।

(६७) घमण्ड र अट्टेरीपना गर्दथे[१] कथा भनेर त्यसलाई छाडिदिन्थे ।[२]

مُسْتَكْبِرِينَ بِهِ سَامِرًا تَهْجُرُونَ ﴿٦٧﴾

(६८) के यिनीहरूले यस कुरामा चिन्तन तथा विचार गरेनन् ?[३] बरु यिनीहरूको पासमा त्यो आयो जुन यिनका पूर्वजहरूका पासमा आएको थिएन ?[४]

أَفَلَمْ يَدَّبَّرُوا الْقَوْلَ أَمْ جَاءَهُم مَّا لَمْ يَأْتِ آبَاءَهُمُ الْأَوَّلِينَ ﴿٦٨﴾

(६९) अथवा यिनीहरूले आफ्ना पैग़म्बर लाई चिनेनन् कि त्यसको इन्कार गरिराखेका छन् ।[५]

أَمْ لَمْ يَعْرِفُوا رَسُولَهُمْ فَهُمْ لَهُ مُنكِرُونَ ﴿٦٩﴾

(७०) अथवा यो भन्दछन् कि यसको मति

أَمْ يَقُولُونَ بِهِ جِنَّةٌ بَلْ جَاءَهُم

[१] بـــه मा सर्वनामलाई अधिकांश व्याख्याकारहरूले البيت العتيق (खानए-काअबा अथवा हरम) तिर लगेका छन् । अर्थात् उनीहरूलाई आफू काअ़बाका पूजारी तथा त्यसका सेवक रक्षक हुनुको जुन गर्व थियो, त्यस आधारमा अल्लाहका आयतहरूलाई इन्कार गरे तथा केहीले पवित्र कुरआनतिर फर्काएका छन् तथा अर्थ यो हो कि कुरआन सुनेर उनका हृदयमा अभिमान, अहङ्कार उत्पन्न हुन्छ, जुन उनीहरूलाई कुरआनमाथि ईमान ल्याउनुबाट रोकिदिन्छ ।

[२] سمر को अर्थ हो रातहरूमा कुरा गर्नु । यहाँ यसको अर्थ विशेषरूपले ती कुराका हुन् जुन कुरआन करीम तथा नबी सल्लल्लाहु अलैहि वसल्लमको विषयमा उनीहरू गर्दथे तथा त्यसका कारण सत्यका कुरा सुन्न तथा स्वीकार गर्नबाट इन्कार गरिदिन्थे अर्थात् छाडिदिन्थे तथा केही विद्वानले هجر को अर्थ बकवास तथा केहीले अश्लील कुरा गरेका छन् । अर्थात् रातहरूका वार्तालापका तिमी कुरआनको महत्वमाथि बकवास गर्दछौ अथवा असभ्य तथा अश्लील कुरा गर्दछौ जसमा कुनै भलाई छैन । (फ़तुहल क़दीर र ऐसरूत्तफासीर)

[३] कुराबाट तात्पर्य कुरआन करीम हो । अर्थात् यसमा विचार गरेको भए उनीहरूलाई यसमाथि ईमान ल्याउनुको सौभाग्य प्राप्त हुन्थ्यो ।

[४] यो أم विच्छेद (منقطعة) अथवा कुरा बदल्नु अर्थात् انتقالية (वरन्) को अर्थमा छ । अर्थात् यसको पासमा त्यो धर्म तथा धार्मिक नियम आएका छन् जसबाट यिनका पूर्वज अज्ञानकालमा बञ्चित रहे । जसमाथि यिनलाई अल्लाहको कृतज्ञता गर्नुपर्छ तथा इस्लाम धर्म स्वीकार गर्नुपर्थ्यो ।

[५] यो चेतावनीको रूपमा छ किनभने त्यो पैग़म्बरका वंश, जाति तथा यसैप्रकार त्यसको सत्यवादिता अमानत, सच्चाई तथा व्यवहार एवं चरित्रको महानतालाई जान्दथे तथा त्यसलाई स्वीकार गर्दथे ।

بِالْحَقِّ وَأَكْثَرُهُمْ لِلْحَقِّ كَٰرِهُونَ ﴿٧٠﴾

बिग्रिसकेको छ ?[1] बरु त्यो त उनको पासमा सत्य लिएर आएको छ । हो, यिनीहरूमध्ये अधिकतर सत्यसित झर्को मान्नेवाला हुन् ।[2]

وَلَوِ اتَّبَعَ الْحَقُّ أَهْوَاءَهُمْ لَفَسَدَتِ السَّمَٰوَٰتُ وَالْأَرْضُ وَمَن فِيهِنَّ ۚ بَلْ أَتَيْنَٰهُم بِذِكْرِهِمْ فَهُمْ عَن ذِكْرِهِم مُّعْرِضُونَ ﴿٧١﴾

(७१) यदि सत्य नै उनका इच्छाको अनुयायी हुन्छ भने धर्ती तथा आकाश एवं उनका मध्ये जति वस्तुहरू छन् सबै अस्तव्यस्त हुनेछन् ।[3] सत्य त यो हो कि हामीले उनीहरूलाई उनका शिक्षा पुऱ्याइदिएका छौं, परन्तु उनीहरू आफ्ना शिक्षाबाट मुख फर्काउनेवाला हुन् ।

أَمْ تَسْأَلُهُمْ خَرْجًا فَخَرَاجُ رَبِّكَ خَيْرٌ ۖ وَهُوَ خَيْرُ الرَّٰزِقِينَ ﴿٧٢﴾

(७२) के तपाईं उनीहरूसित कुनै पारिश्रमिक चाहनुहुन्छ ? याद राख्नुस्, तपाईंको प्रभुको पारिश्रमिक अति श्रेष्ठ छ तथा त्यो सर्वश्रेष्ठ जीविका पुऱ्याउनेवाला छ ।

وَإِنَّكَ لَتَدْعُوهُمْ إِلَىٰ صِرَٰطٍ مُّسْتَقِيمٍ ﴿٧٣﴾

(७३) नि:सन्देह तपाईं न उनीहरूलाई सोझो मार्गतिर आमन्त्रित गरिराख्नु भएको छ ।



[1]यो पनि धम्की तथा चेतावनीको रूपमा नै छ अर्थात् यस पैगम्बरले यस्तो कुरआन प्रस्तुत गरेको छ जसको समतुल्य प्रस्तुत गर्नबाट संसार विवश छ, यसैप्रकार यसको शिक्षाहरू मनुष्य जातिको लागि कृपा तथा शान्ति एवं स्थिरताको कारण हो । के यस्तो कुरआन तथा यस्ता शिक्षाहरू यस्तो व्यक्ति प्रस्तुत गर्न सक्दछ, जो दीवाना तथा पागल छ ?

[2]अर्थात् उनीवाट मुख फर्काउनु तथा अहङ्कारको मूल कारण सत्यताबाट उनको घृणा हो, जुन दीर्घकालदेखि असत्यको मार्गमा हिंड्नुका कारण उनीहरूभित्र उत्पन्न भइसकेको छ ।

[3]सत्यसित उनीवाट धर्म तथा धार्मिक नियम हुन् । अर्थात् यदि धर्म उनका इच्छा अनुसार अवतरित हुन्छ भने स्पष्ट कुरो छ कि धर्ती तथा आकाशको सारा प्रबन्ध नै छिन्न-भिन्न हुनपुग्दछ । यदि यस्तो वास्तवमा हुन्छ भने के सृष्टिको व्यवस्था ठीक रहनसक्छ ? तथा यसैप्रकारका अन्य उनीहरूका इच्छा छन् ।

وَإِنَّ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ عَنِ الصِّرَاطِ لَنَاكِبُونَ ﴿٧٤﴾

(७४) तथा निःसन्देह जुन मानिसहरू आखिरतमा विश्वास गर्दैनन् उनीहरू सोझो मार्गबाट विचलित हुनेवाला छन् ।[1]

وَلَوْ رَحِمْنَاهُمْ وَكَشَفْنَا مَا بِهِم مِّن ضُرٍّ لَّلَجُّوا فِي طُغْيَانِهِمْ يَعْمَهُونَ ﴿٧٥﴾

(७५) तथा यदि हामी उनीमाथि कृपा गर्दछौं तथा उनका कठिनाईहरू समाप्त गरिदिन्छौं भने त यिनी त आ-आफ्ना दुष्टतामा अधिक दृढ रही अधिक विचलित हुनेछन् ।[2]

وَلَقَدْ أَخَذْنَاهُم بِالْعَذَابِ فَمَا اسْتَكَانُوا لِرَبِّهِمْ وَمَا يَتَضَرَّعُونَ ﴿٧٦﴾

(७६) तथा हामीले उनीहरूलाई यातनामा पनि जकड्यौं, तैपनि तिनीहरू न त आफ्ना प्रभुका समक्ष नतमस्तक भए तथा न विन्तीको मार्ग अपनाए ।[3]

---

[1]अर्थात् सोझो मार्गबाट उनी विमुख हुनु आख़िरतमा ईमान नहुनु हो ।

[2]इस्लामका विरूद्ध तिनका हृदयमा जुन द्वेष तथा घृणा थियो तथा कुफ्र तथा शिर्कका दलदलमा जुनप्रकारले उनीहरू फँसेका थिए, यसमा त्यसको वर्णन छ ।

[3]प्रकोपसित तात्पर्य यहाँ त्यो पराजय हो जुन बद्रका युद्धमा मक्काका काफ़िरहरूको भयो, जसमा उनको सत्तरी मानिस मारिएका थिए अथवा त्यो अकालको प्रकोप हो जुन नबी सल्लल्लाहु अलैहि वसल्लमका शापका परिणाम स्वरूप आएको थियो । यहाँ सल्लल्लाहु अलैहि वसल्लमले प्रार्थना गर्नुभएको थियो «اللَّهُمَّ أَعِنِّي عَلَيْهِمْ بِسَبْعٍ كَسَبْعِ يُوسُفَ» (सहीह बुख़ारी किताबुद् दअवात, बाबुद् दुआ अलल मुश्रिकीन तथा सहीह मुस्लिम किताबुल मसाजिद बाब इस्तहबाबिल कुनूत फी जमी इस्सलात इज़ा नज़लत बिलमुस्लिमीन नाज़िला:) “हे अल्लाह ! जुनप्रकार आदरणीय यूसुफका समयमा सात वर्ष अकाल रहयो, त्यसैप्रकार अकालबाट यिनलाई पीडित गरी उनका समक्ष मेरो सहायता गर ।” अत: मक्काका काफ़िर यस अकालबाट पीडित गरिए, जसपश्चात आदरणीय अबू सुफियान नबी सल्लल्लाहु अलैहि वसल्लमको पासमा आए तथा उहाँलाई अल्लाहको तथा सन्दर्भ दिएर भने कि अब त हामी पशुहरूका चर्म तथा रगत खानका लागि विवश भएका छौं जसमाथि आयत अवतिरत भयो । (इब्ने कसीर)

حَتّٰۤى اِذَا فَتَحْنَا عَلَيْهِمْ بَابًا ذَا عَذَابٍ شَدِيْدٍ اِذَا هُمْ فِيْهِ مُبْلِسُوْنَ ﴿٧٧﴾

(७७) यहाँसम्मकि जब हामीले उनीमाथि साह्रो प्रकोपको द्वार खोलिदियौं त त्यसैवखत तुरून्त निराश भइहाले ।[1]

وَهُوَ الَّذِيْۤ اَنْشَاَ لَكُمُ السَّمْعَ وَالْاَبْصَارَ وَالْاَفْـِٕدَةَ ؕ قَلِيْلًا مَّا تَشْكُرُوْنَ ﴿٧٨﴾

(७८) त्यही (अल्लाह) हो जसले तिम्रा लागि कान, आँखा तथा हृदय बनायो, तर तिमी साह्रै कम कृतज्ञता व्यक्त गर्दछौ ।[2]

وَهُوَ الَّذِيْ ذَرَاَكُمْ فِي الْاَرْضِ وَاِلَيْهِ تُحْشَرُوْنَ ﴿٧٩﴾

(७९) तथा त्यही हो जसले तिमीलाई (पैदा गरी) धर्तीमा फैलायो तथा उसैतिर तिमी एकत्रित गरिनेछौ ।[3]

وَهُوَ الَّذِيْ يُحْيٖ وَيُمِيْتُ وَلَهُ اخْتِلَافُ الَّيْلِ وَالنَّهَارِ ؕ اَفَلَا تَعْقِلُوْنَ ﴿٨٠﴾

(८०) तथा यो त्यही हो जो जीवित पार्दछ तथा मार्दछ तथा रात्रि-दिनका फेरबदल[4] गर्ने मालिक पनि त्यही हो, के तिमीलाई ज्ञान छैन ?[5]

بَلْ قَالُوْا مِثْلَ مَا قَالَ الْاَوَّلُوْنَ ﴿٨١﴾

(८१) बरु उनीहरूले पनि त्यही कुरा भने जुन अघिका मानिसहरू भन्दै आएका छन् ।

[1]यसबाट सांसारिक यातना पनि तात्पर्य हुनसक्छ तथा आख़िरतको पनि, जहाँ उनी सबै सुख तथा पुण्यबाट निराश तथा बञ्चित हुनेछन् तथा सबै आशा समाप्त हुनेछन् ।

[2]अर्थात् बुद्धि तथा समझ एवं सुन्ने यी शक्तिहरू प्रदान गऱ्यो ताकि उनीद्वारा त्यो सत्य चिनून्, सुनून् तथा त्यसलाई स्वीकार गरून् । यही यी उपकारहरूको कृतज्ञता हो । परन्तु यो कृतज्ञता व्यक्त गर्नेवाला अर्थात् सत्यलाई अपनाउनेवाला कम नै छन् ।

[3]यसमा अल्लाहको महिमाको वर्णन छ कि जुनप्रकार तिमीलाई पैदा गरी विभिन्न क्षेत्रहरूमा फैलाएको छ, तिम्रा रङ्ग पनि एक-अर्कासित भिन्न छन्, भाषाहरू पनि भिन्न तथा व्यवहार एवं संस्कृति पनि भिन्न । पछि एउटा समय आउनेछ जबकि तिमी सबैलाई जीवित पारी त्यसले आफ्नो दरबारमा एकत्रित गर्नेछ ।

[4]अर्थात् रात्रि पश्चात दिन तथा दिन पश्चात रात्रि आउनु, अनि रात-दिनको सानो ठूलो हुने कुरा ।

[5]जसबाट तिमी यो बुझ्न सक कि यी सबै कुरा त्यस अल्लाहको तर्फबाट छ, जो प्रत्येक कुरोमाथि प्रभावशाली छ तथा त्यसका समक्ष प्रत्येक वस्तु नतमस्तक छ ।

قَالُوٓا۟ أَءِذَا مِتْنَا وَكُنَّا تُرَابًا وَعِظَٰمًا أَءِنَّا لَمَبْعُوثُونَ ﴿٨٢﴾

(८२) (उनीहरूले) भने कि जब हामी मरेर माटो तथा अस्थि भइहाल्नेछौं, त के फेरि पनि हामी अवश्य उभ्याइनेछौं ?

لَقَدْ وُعِدْنَا نَحْنُ وَءَابَآؤُنَا هَٰذَا مِن قَبْلُ إِنْ هَٰذَآ إِلَّآ أَسَٰطِيرُ ٱلْأَوَّلِينَ ﴿٨٣﴾

(८३) हामीसित तथा हाम्रा पूर्वजहरूसित अघिदेखि नै यो वादा (बाचा) हुँदै आइपरेको छ, केही होइन यो त मात्र अघिका मानिसहरूका मनगढन्त कुरा हुन् ।[1]

قُل لِّمَنِ ٱلْأَرْضُ وَمَن فِيهَآ إِن كُنتُمْ تَعْلَمُونَ ﴿٨٤﴾

(८४) सोध्नुस् त कि धर्ती तथा त्यसका सम्पूर्ण कुरा कसका हुन् ? भन यदि जान्दछौ ।

سَيَقُولُونَ لِلَّهِ ۚ قُلْ أَفَلَا تَذَكَّرُونَ ﴿٨٥﴾

(८५) उनीहरू तुरुन्त उत्तर दिनेछन् कि अल्लाहका, भनिदिनुस् त त्यसपछि तिमी शिक्षा किन ग्रहण गर्दैनौं ।

قُلْ مَن رَّبُّ ٱلسَّمَٰوَٰتِ ٱلسَّبْعِ وَرَبُّ ٱلْعَرْشِ ٱلْعَظِيمِ ﴿٨٦﴾

(८६) सोध्नुस्, सातवटै आकाशहरूका तथा अति सम्मानित अर्श (सिंहासन) को प्रभु को हो ?

سَيَقُولُونَ لِلَّهِ ۚ قُلْ أَفَلَا تَتَّقُونَ ﴿٨٧﴾

(८७) उनीहरू उत्तर दिनेछन् कि अल्लाह नै हो । भनिदिनुस् कि त्यसो भए तिमी किन तर्सन्नौं ?[2]

قُلْ مَنۢ بِيَدِهِۦ مَلَكُوتُ كُلِّ شَىْءٍ وَهُوَ

(८८) सोध्नुस् कि सबै वस्तुहरूको अधिकार कसको हातमा छ त्यो जो शरण दिन्छ[3] तथा

---

[1] أساطير बहुवचन हो أسطورة का अर्थात मسطرة مكتوبة लेखिएका कुरा, कथाहरू। अर्थात् पुन: जीवित भई उठ्नुको वादा (बाचा) अघिदेखि नै चल्दै आइराखेको छ हाम्रा पूर्वजबाट ! परन्तु अहिलेसम्म त कार्यान्वित भएन, जसको स्पष्ट अर्थ यो हो कि यी कथाहरू हुन् जुन पूर्वकालिक मानिसहरूले आफ्ना किताबहरूमा लेखिदिएका छन् जुनकि अहिलेसम्म चल्दै आइराखेका छन्, जसको कुनै वास्तविकता छैन ।

[2] अर्थात् जब तिमीलाई स्वीकार्य छ कि धर्तीको तथा त्यसमा स्थित प्रत्येक वस्तुको स्रष्टा मात्र एक अल्लाह नै हो तथा आकाश एवं महान अर्शको स्वामी पनि त्यही हो तैपनि तिमीलाई यो स्वीकार गर्नमा किन दुविधा छ कि इबादतको योग्य पनि त्यही एक अल्लाह हो, अनि तिमी त्यसको एक हुने कुरोलाई स्वीकार गरी त्यसको प्रकोपबाट बच्ने प्रयत्न किन गर्दैनौं ?

[3] अर्थात् जसको त्यो रक्षा गर्न चाहन्छ तथा आफ्नो शरणमा लिन्छ, के त्यसलाई कुनै हानि पुऱ्याउन सक्दछ ?

يُجِيرُ وَلَا يُجَارُ عَلَيْهِ إِن كُنتُمْ تَعْلَمُونَ ﴿٨٨﴾

जसको तुलनामा कुनै शरण दिईंदैन,[1] यदि तिमी जान्दछौ भने बताउ ?

سَيَقُولُونَ لِلَّهِ ۚ قُلْ فَأَنَّىٰ تُسْحَرُونَ ﴿٨٩﴾

(८९) यही उत्तर दिनेछन् कि अल्लाह नै हो, भनिदेउ त्यसो भए तिमीमाथि कताबाट जादू हुन्छ ?[2]

[1]अर्थात् त्यो जसलाई हानि पुऱ्याउन चाहन्छ त के सम्पूर्ण सृष्टिमा अल्लाहका अतिरिक्त यस्तो शक्ति छ कि त्यो त्यसलाई हानिबाट सुरक्षित गरोस् तथा अल्लाहका समक्ष आफ्नो शरणमा लेओस् ।

[2]अर्थात् त्यसपछि तिम्रो बुद्धिलाई के भएको छ कि यसलाई स्वीकार गर्नुका उपरान्त तिमी अरुहरूलाई त्यसको इबादत (उपासना) मा सम्मिलित गर्दछौ ? कुरआन करीमको यो स्पष्ट वर्णन छ कि मक्काका मूर्तिपूजकहरूलाई अल्लाह तआलाको प्रभु, स्रष्टा, स्वामी तथा पोषक हुने कुरोबाट इन्कार थिएन, बरु उनीहरू यी सबै कुरा स्वीकार गर्दथे, उनीहरूलाई मात्र एउटा अल्लाहको पूजाबाट इन्कार थियो । अर्थात् इबादत केवल एक अल्लाहको गर्दैनथे, बरु त्यसमा अरुहरूलाई पनि सम्मिलित गर्दथे । यसकारण होइन कि आकाश तथा धर्तीको सृष्टि अथवा त्यसको प्रबन्धमा कोही अन्य पनि त्यसको अंशियार छ, बरु मात्र यस भ्रमको आधारमा कि यिनी पनि अल्लाहका निकटवर्ती भक्त थिए, उनलाई पनि अल्लाहले केही अधिकार दिएको छ तथा हामी उनीद्वारा अल्लाहका निकटता प्राप्त गर्दछौं । यही भ्रम अचेल मृत-पूजक अहले विदअत (इस्लाम धर्ममा नवीन विचार-धाराका समावेश गर्नेहरू) लाई छ जसका आधारमा उनी मृतक मानिसहरूलाई सहायताका लागि गुहार्दछन्, तिनका नामका भोग-प्रसाद चढाउँछन् तथा उनलाई अल्लाहको इबादतमा सम्मिलित बताउँछन् । यद्यपि अल्लाहले कहीं पनि यो भनेको छैन कि मैले कुनै मृतक महात्मा, महापुरुष अथवा नबीलाई अधिकार दिएको छु तिमी उनीद्वारा मेरो निकटता प्राप्त गर अथवा उनीहरूलाई सहायताका लागि पुकार अथवा तिनका नामका भोग-प्रसाद चढाउ । यसैले अल्लाहले अगाडी भने कि हामीले सत्य पुऱ्याइदियौं । अर्थात् यो राम्ररी स्पष्ट गरिदियौं कि अल्लाहका अतिरिक्त कोही पूजा योग्य छैन, तथा यदि यिनीहरू अल्लाहका अतिरिक्त कोही पूजा योग्य छैन, तथा यदि यिनीहरू अल्लाहका इबादतमा अरुहरूलाई सम्मिलित गरिराखेका छन् भने त यसकारण होइन कि उनीसित यसको कुनै प्रमाण छ, होइन, बरु मात्र एक-अर्काको देखा सेखी तथा पूर्वजहरूका अनुकरणका कारण शिर्कको कार्य गरिराखेका छन् । वास्तवमा यिनी पूर्णरूपले झुठा हुन् । न त्यसको कोही सन्तान छ न त्यसको कोही अंशियार, यदि यस्तो भएको भए प्रत्येक अंशियार आफ्ना भाग्यको सृष्टिको प्रबन्ध आफ्नो इच्छा अनुसार गर्दथ्यो तथा प्रत्येक अंशियार अन्यमाथि प्रभावशाली हुनुको प्रयत्न गर्दथ्यो । तथा जब यस्तो छैन तथा सृष्टिको प्रबन्धमा तानातान छैन भने निःसन्देह अल्लाह तआला यी सबै कुराबाट पवित्र एवं उच्चतम छ, जुन मूर्तिपूजक त्यसको सम्बन्धमा भन्दछन् ।

بَلْ أَتَيْنَٰهُم بِٱلْحَقِّ وَإِنَّهُمْ لَكَٰذِبُونَ ﴿٩٠﴾

(९०) सत्य यो हो कि हामीले सत्य पुऱ्याइदिएका छौं तथा यिनीहरू निःसन्देह भूठा हुन् ।

مَا ٱتَّخَذَ ٱللَّهُ مِن وَلَدٍ وَمَا كَانَ مَعَهُۥ مِنْ إِلَٰهٍ ۚ إِذًا لَّذَهَبَ كُلُّ إِلَٰهٍۭ بِمَا خَلَقَ وَلَعَلَا بَعْضُهُمْ عَلَىٰ بَعْضٍ ۚ سُبْحَٰنَ ٱللَّهِ عَمَّا يَصِفُونَ ﴿٩١﴾

(९१) न त अल्लाहले कसैलाई पुत्र बनायो तथा न त्यसको साथ अन्य कोही देवता छ, अन्यथा प्रत्येक देवता आफ्नो सृष्टिलाई लिएर अलग्ग हिंड्थ्यो तथा प्रत्येक एक-अर्कामाथि उच्च हुने प्रयत्न गर्दथे जुन गुण यिनीहरू बताउँछन् अल्लाह तिनीबाट पवित्र हुनुहुन्छ ।

عَٰلِمِ ٱلْغَيْبِ وَٱلشَّهَٰدَةِ فَتَعَٰلَىٰ عَمَّا يُشْرِكُونَ ﴿٩٢﴾

(९२) त्यो अदृश्य-दृश्यलाई जान्नेवाला छ तथा जुन शिर्क यिनीहरू गर्दछन् त्यसभन्दा सर्वोपरि छ ।

قُل رَّبِّ إِمَّا تُرِيَنِّى مَا يُوعَدُونَ ﴿٩٣﴾

(९३) (तपाईं) दुआ (प्रार्थना) गर्नुस् कि हे मेरो प्रभु ! यदि तपाईं मलाई त्यो देखाउँछौ जसको वचन यिनीहरूलाई दिईंदैछ ।

رَبِّ فَلَا تَجْعَلْنِى فِى ٱلْقَوْمِ ٱلظَّٰلِمِينَ ﴿٩٤﴾

(९४) त हे मेरा प्रभु ! तपाईं मलाई यी अत्याचारीहरूको गुटमा नपार्नु ।[1]

وَإِنَّا عَلَىٰٓ أَن نُّرِيَكَ مَا نَعِدُهُمْ لَقَٰدِرُونَ ﴿٩٥﴾

(९५) तथा हामी जे-जति वचन उनीहरूलाई दिइराखेका छौं, सबै तपाईंलाई देखाइदिने सामर्थ्य राख्दछौं ।

ٱدْفَعْ بِٱلَّتِى هِىَ أَحْسَنُ ٱلسَّيِّئَةَ ۚ نَحْنُ أَعْلَمُ بِمَا يَصِفُونَ ﴿٩٦﴾

(९६) नराम्रो कुरोलाई यसप्रकार खतम गर जुन पूर्णतः उत्तम होस्[2] जे-जति यिनीहरू वर्णन गर्दछन्, त्यससित हामी राम्ररी परिचित छौं ।

[1]अतः हदीसमा चर्चित छ कि नबी सल्लल्लाहु अलैहि वसल्लम दुआ गर्नुहुन्थ्यो ।

«وإذَا أرَدْتَ بِقَوْمٍ فِتْنَةً فَتَوَفَّنِي إِلَيْكَ غَيْرَ مَفْتُونٍ»

"हे अल्लाह ! जब तिमी कुनै समुदायमाथि परीक्षा अथवा यातना पठाउनुको निर्णय गर्दछौ भने त्यसभन्दा पूर्व नै मलाई संसारबाट उठाइहाल ।" (तिर्मिजी तफ़सीर सूरः साद तथा मुसनद अहमद भाग ५ पृष्ठ २४३)

[2]जसरी अन्य स्थानमा आदेश गऱ्यो,

(९७) तथा दुआ (प्रार्थना) गर्नुस् कि हे मेरा प्रभु ! म शैतानहरूका शंकाबाट तपाईंको शरण चाहन्छु ।[1]

وَ قُلْ رَّبِّ اَعُوْذُ بِكَ مِنْ هَمَزٰتِ الشَّيٰطِيْنِ ﴿٩٧﴾

(९८) तथा हे मेरा प्रभु ! म तिम्रो शरण चाहन्छु कि उनीहरू मेरो पासमा आऊन् ।[2]

وَاَعُوْذُ بِكَ رَبِّ اَنْ يَّحْضُرُوْنِ ﴿٩٨﴾

(९९) यहाँसम्मकि जब उनीमध्ये कसैको मृत्यु आउन थाल्छ त भन्छ कि हे मेरा प्रभु ! मलाई फिर्ता पठाइदेउ ।

حَتّٰٓى اِذَا جَآءَ اَحَدَهُمُ الْمَوْتُ قَالَ رَبِّ ارْجِعُوْنِ ﴿٩٩﴾

(१००) ताकि आफूले छाडेको संसारमा पुण्यका कार्य गरूँ ।[3] कदापि यस्तो

لَعَلِّيْٓ اَعْمَلُ صَالِحًا فِيْمَا تَرَكْتُ

"नराम्रो यसप्रकारले समाप्त गर जुन राम्रो होस्, यसको परिणाम यो हुनेछ कि तिम्रो शत्रु पनि तिम्रो घनिष्ट मित्र बन्नेछ ।" (हा.मीम.सजदा-३४, ३५)

[1]अत: नबी सल्लल्लाहु अलैहि वसल्लम शैतानबाट यसप्रकार शरण माँग्नुहुन्थ्यो أعوذ بالله السميع العليم من الشيطان الرجيم من همزه و نفخه و نفثه (अबू दाऊद, किताबुस सलात, बाबु मा युस्तफ्तहु बिही स्सलात मिनद दुआ र तिर्मिजी बाब मा यकूलो इन्द इफ्तेताहिस्सलाते)

[2]यसैले नबी सल्लल्लाहु अलैहि वसल्लमले बलपूर्वक भन्नुभयो कि प्रत्येक महत्वपूर्ण कार्यको प्रारम्भ अल्लाहको नामबाट गर अर्थात् बिस्मिल्लाह पढेर किनकि अल्लाहको याद शैतानबाट टाढा क्रो हो । यसैकारण उहाँ सल्लल्लाहु अलैहि वसल्लम यो दुआ गर्नुहुन्थ्यो । «اللَّهُمَّ إِنِّي أَعُوذُ بِكَ مِنَ الْهَرَمِ، وَأَعُوذُ بِكَ مِنَ الْهَدْمِ، وَمِنَ الْغَرَقِ، وَأَعُوذُ بِكَ أَنْ يَتَخَبَّطَنِي الشَّيْطَانُ عِنْدَ الْمَوْتِ» (अबू दाऊद किताबुल वित्र बाब फिल् इस्तेआज:) राति घबराहटको बेलामा उहाँ सल्लल्लाहु अलैहि वसल्लम यो दुआ पढ्ने गर्नुहुन्थ्यो । «بِاسْمِ اللهِ، أَعُوذُ بِكَلِمَاتِ اللهِ التَّامَّةِ مِنْ غَضَبِهِ، وَعِقَابِهِ، وَمِنْ شَرِّ عِبَادِهِ، وَمِنْ هَمَزَاتِ الشَّيَاطِينِ وَأَنْ يَحْضُرُونِ» (मुसनद अहमद भाग-२ पृष्ठ १८१ अबू दाऊद किताबुत तिब्ब, बाब कैफ्रोका र तिर्मिजी अबवाबुल दअवात)

[3]यो कामना प्रत्येक काफ़िर मृत्युको समय पुन: उठाइनेबेला, अल्लाहको सदनमा उभिंदाखेरि तथा नरकमा धकेलिने बेलामा गर्दछ तथा गर्नेछ, तर यसको कुनै लाभ हुनेछैन । कुर्आन करीममा यस विषयलाई विभिन्न स्थानहरूमा वर्णन गरिएको छ । जस्तै सूर: मुनाफ़ीकून-१० तथा ११, सूर: इब्राहीम-४४, सूर: आराफ़-५३ अलिफ.लाम.मीम. सजदा-१२, सूर: अनआम २७ तथा २८, सूर: अश्शूरा-२४, सूर: अल-मोमिन-११ तथा १२, सूर: फ़ातिर-३७ तथा यसैप्रकार अन्य आयतहरू ।

कदापि होइन[1] यो एउटा कथन हो जुन त्यसले भन्नेछ।[2] उनको पछाडीबाट त्यस दिनसम्म जब उनी पुनः उठाइनेछन्।[3]

كَلَّا ۚ إِنَّهَا كَلِمَةٌ هُوَ قَآئِلُهَا ۖ وَمِن وَرَآئِهِم بَرْزَخٌ إِلَىٰ يَوْمِ يُبْعَثُونَ ﴿١٠٠﴾

[1] كَلَّا हप्की-झप्कीको लागि हो अर्थात् यस्तो कहिले हुन सक्दैन कि उनीहरूलाई पुनः संसारमा पठाइयोस्।

[2]यसको एउटा अर्थ त यो हो कि यस्तो कुरो हो कि जुन प्रत्येक काफ़िर प्राण निस्कने बेलामा भन्छ। दोस्रो अर्थ हो कि केवल कुरा मात्र हो, कर्म होइन। यदि उनीहरूलाई पुनः पनि संसारमा पठाइन्छ भने त उनको यो कथनी मात्र कथनी नै रहनेछ, पुण्यको कार्य गर्नुको सौभाग्य तैपनि हुनेछैन। जस्तो अन्य स्थानमा आदेश गऱ्यो।

﴿ وَلَوْ رُدُّوا لَعَادُوا لِمَا نُهُوا عَنْهُ ﴾

"तथा उनीहरूलाई संसारमा पुनः फर्काइन्छ तैपनि त्यही कार्य गर्नेछन् जसबाट उनीहरूलाई रोकिएको थियो।" (सूरः अल-अनाम-२८)

आदरणीय कतादः भन्नुहुन्छ, काफ़िरको यस कामनामा हाम्रो लागि ठूलो पाठ छ, काफ़िर संसारमा आफ्ना परिवार तथा समूहको पासमा जानुको कामना गर्नेछैन्, बरु पुण्यका कार्य गर्नको लागि संसारमा आउने कामना गर्नेछन्। यसकारण संसारको जीवनलाई लाभकारी क्षण ठान्दै बढीभन्दा बढी पुण्यका काम गर्नुपर्छ ताकि क़ेयामतमा यो कामना गर्नुको आवश्कता नहोस्। (इब्ने क़सीर)

[3]यसको एउटा अर्थ यो हो दुई वस्तुमध्ये रूकावट तथा छेकवारलाई برزخ (बर्जख) भनिन्छ। संसारको जीवन तथा आख़िरतको जीवन बीचको जुन अवधि छ, त्यसलाई यहाँ برزخ भनिएको छ किनभने मर्नुका पश्चात मनुष्यको सम्बन्ध दुनियाँसित समाप्त हुन्छ तथा आख़िरतको जीवनको प्रारम्भ त्यसबेला हुनेछ जब सबै मानिसहरूलाई पुनः जीवित गरिनेछ। यो मध्येको जीवन जुन कब्र (चिहान) मा अथवा पंक्षीको पेटमा अथवा पोलिदिएको अवस्थामा माटोका कणहरूमा गुज्रन्छ, बर्जख़को जीवन। मानिसको यो अस्तित्व जहाँपनि तथा जुन रूपमा पनि हुनेछ। स्पष्टरूपले त्यो माटो बनिसकेको हुनेछ, अथवा खरानी बनाएर हावामा उडाइयो अथवा नदीमा बगाइदिएको हुनेछ अथवा कुनै पशुको भोजन बनिसकेको हुनेछ, तर अल्लाह तआला सबैलाई एउटा नयाँ रूप प्रदान गरी हश्रको मैदानमा एकत्रित गर्नेछ।

(१०१) त जब नरसिंघा (शङ्ख) मा फुकिनेछ, त्यस दिन न त आपसका सम्बन्ध नै रहनेछन्, न आपसका सोधपूछ ।[1]

فَإِذَا نُفِخَ فِي الصُّورِ فَلَا أَنسَابَ بَيْنَهُمْ يَوْمَئِذٍ وَلَا يَتَسَاءَلُونَ ﴿١٠١﴾

(१०२) जसको तराजूको पलरा गह्रुङ्गो भयो, उनीहरू त मोक्ष प्राप्त गर्नेवाला भए ।

فَمَن ثَقُلَتْ مَوَازِينُهُ فَأُولَٰئِكَ هُمُ الْمُفْلِحُونَ ﴿١٠٢﴾

(१०३) तथा जसको तराजूको पलरा हलुङ्गो रहयो यिनी त्यसता मानिसहरू हुन् जसले आफ्नो हानि आफैं गरे, जो सधैंका लागि नरकमा गए ।

وَمَنْ خَفَّتْ مَوَازِينُهُ فَأُولَٰئِكَ الَّذِينَ خَسِرُوا أَنفُسَهُمْ فِي جَهَنَّمَ خَالِدُونَ ﴿١٠٣﴾

(१०४) उनका मुखलाई आगोले पोलिरहनेछ,[2] त्यहाँ उनीहरू कुरूप बनेका हुनेछन् ।[3]

تَلْفَحُ وُجُوهَهُمُ النَّارُ وَهُمْ فِيهَا كَالِحُونَ ﴿١٠٤﴾

(१०५) के मेरा आयतका पाठ तिम्रा समक्ष हुँदैनथे ? तैपनि तिमी उनलाई झूठा भन्थ्यौ ।

أَلَمْ تَكُنْ آيَاتِي تُتْلَىٰ عَلَيْكُمْ فَكُنتُم بِهَا تُكَذِّبُونَ ﴿١٠٥﴾

(१०६) उनीहरू भन्नेछन् कि हे मेरा प्रभु ! हाम्रो दुर्भाग्य हामीमाथि प्रभावशाली भयो,[4] वास्तवमा हामी पथ-विचलित थियौं ।

قَالُوا رَبَّنَا غَلَبَتْ عَلَيْنَا شِقْوَتُنَا وَكُنَّا قَوْمًا ضَالِّينَ ﴿١٠٦﴾

[1]हश्रको भयानकताको कारण प्रारम्भमा यस्तो हुनेछ, पछि उनी एक-अर्कासित सोध्ने पनि छन् ।

[2]मुखको वर्णन यसकारण गरिएको छ कि मनुष्यको अस्तित्वको सबैभन्दा महत्वपूर्ण एवं उत्तम अङ्ग हो, अन्यथा नर्कको अग्नि त सम्पूर्ण शरीरलाई नै घेरिएको हुनेछ ।

[3] كَلَحَ को अर्थ हो होठ खुम्चिएर दाँत देखिनु । ओठ दाँतहरूको वस्त्रको रूपमा छ, जब यिनी नरकको अग्निले खुम्चिने छन् त दाँत स्पष्ट रूपमा देखिनेछन्, जसवाट मनुष्यको रूप कुरूप तथा डरलाग्दो हुनेछ ।

[4]स्वाद तथा आकांक्षालाई जुन मनुष्यमाथि प्रभावशाली रहन्छन्, यहाँ दूर्भाग्य भनिएको छ, किनभने यिनको परिणाम स्थाई रूपले दूर्भाग्यपूर्ण हुन्छ ।

رَبَّنَآ أَخۡرِجۡنَا مِنۡهَا فَإِنۡ عُدۡنَا فَإِنَّا ظَٰلِمُونَ ١٠٧

(१०७) हे मेरा प्रभु ! हामीलाई यहाँबाट निकालिदेउ, यदि अब हामी यस्तो गर्छौं भने निःसन्देह हामी अत्याचारी हौं ।

قَالَ ٱخۡسَـُٔواْ فِيهَا وَلَا تُكَلِّمُونِ ١٠٨

(१०८) (अल्लाह तआला) भन्नेछ धिक्कार छ तिमीमाथि तथा मसित कुरा नगर ।

إِنَّهُۥ كَانَ فَرِيقٞ مِّنۡ عِبَادِي يَقُولُونَ رَبَّنَآ ءَامَنَّا فَٱغۡفِرۡ لَنَا وَٱرۡحَمۡنَا وَأَنتَ خَيۡرُ ٱلرَّٰحِمِينَ ١٠٩

(१०९) मेरा भक्तहरूको एउटा गुट थियो जुन निरन्तर यही भन्दै गर्‍यो कि हे मेरा प्रभु ! हामी ईमान ल्याइसकेका छौं, तिमी हामीलाई क्षमा गरिदेउ तथा हामीमाथि कृपा गर, तिमी सबै कृपालुहरूभन्दा अधिक कृपालु छौ ।

فَٱتَّخَذۡتُمُوهُمۡ سِخۡرِيًّا حَتَّىٰٓ أَنسَوۡكُمۡ ذِكۡرِي وَكُنتُم مِّنۡهُمۡ تَضۡحَكُونَ ١١٠

(११०) (परन्तु) तिमी तिनको उपहास नै गरिरहयौ यहाँसम्मकि (उनका पछाडी) तिमी मेरो स्मरण बिर्सिहाल्यौ तथा तिमी उनको उपहास गर्दैरहयौ ।

إِنِّي جَزَيۡتُهُمُ ٱلۡيَوۡمَ بِمَا صَبَرُوٓاْ أَنَّهُمۡ هُمُ ٱلۡفَآئِزُونَ ١١١

(१११) मैले आज उनका धैर्य (तथा संयम) को प्रतिफल दिएको छु कि उनी आफ्ना इच्छित आकांक्षासम्म पुगिसकेका छन् ।[1]

---

[1]संसारमा ईमानवालाहरूका लागि धैर्य एवं संयमको परीक्षाको एउटा घडी यो पनि हुन्छ कि जब उनी धर्म तथा ईमानका कुरा अनुसार कर्म गर्ने प्रयत्न गर्दछन् त धर्मबाट अन्जान तथा ईमानसित अनभिज्ञ मानिसहरू उनलाई आफ्ना उपहास तथा निन्दाको लक्ष्य बनाउँछन् । कैयन् कमजोर ईमानवाला छन् कि उनी यी निन्दाका भयले अल्लाहका धेरै आदेशहरू अनुसार कर्म गर्नबाट पन्छिन्छन् । जस्तै दाह्री छ, स्त्रीहरूका पर्दाको कुरो छ, विवाहमा हिन्दु धर्मका रीतिरिवाजहरूबाट पन्छिनु छ इत्यादि । सौभाग्याशाली छन् ती मानिसहरू जो कुनै उपहास तथा धिक्कारको चिन्ता नगरिकन अल्लाह तथा उहाँका रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका आदेशहरूको पालन गर्नबाट कुनै अवसरमा पनि मुख फर्काउने छैनन् । ﴿وَلَا يَخَافُونَ لَوۡمَةَ لَآئِمٖ﴾ अल्लाह तआला केयामतमा यसको श्रेष्ठतम प्रतिफल प्रदान गर्नेछ तथा उनीहरूलाई सफलता प्रदान गर्नेछ जस्तो कि यस आयतबाट स्पष्ट छ । اللهم اجعلنا منهم (हे अल्लाह ! हामीलाई उनीहरूमध्येकै बनाइदेउ ।

(११२) (अल्लाह तआला) सोध्नेछ कि तिमी धर्तीमा वर्षहरूको गणनाले कति वर्ष रहयौ ?

قٰلَ كَمْ لَبِثْتُمْ فِي الْاَرْضِ عَدَدَ سِنِيْنَ ﴿١١٢﴾

(११३) (उनीहरू) भन्नेछन् एक दिन अथवा एक दिनभन्दा पनि कम, गणना गर्नेहरूसँग पनि सोध्नुस् ।[1]

قَالُوْا لَبِثْنَا يَوْمًا اَوْ بَعْضَ يَوْمٍ فَسْـَٔلِ الْعَآدِّيْنَ ﴿١١٣﴾

(११४) (अल्लाह तआला) आदेश गर्नेछ वास्तविकता यो हो कि तिमी यहाँ निकै कम रहयौ, काश ! यसलाई काश यो कुरो तिमी अघिदेखि नै यो कुरो बुझिहालेको भए ।[2]

قٰلَ اِنْ لَّبِثْتُمْ اِلَّا قَلِيْلًا لَّوْ اَنَّكُمْ كُنْتُمْ تَعْلَمُوْنَ ﴿١١٤﴾

(११५) के तिमीले यो ठानेका छौ कि हामीले तिमीलाई व्यर्थ नै सृष्टि गरेका छौं, तथा यो कि तिमी हामीतिर फर्काइने नै छैनौ ?

اَفَحَسِبْتُمْ اَنَّمَا خَلَقْنٰكُمْ عَبَثًا وَّاَنَّكُمْ اِلَيْنَا لَا تُرْجَعُوْنَ ﴿١١٥﴾

(११६) अल्लाह तआला सत्य सम्राट हो, त्यो सर्वोच्च छ,[3] त्यसका अतिरिक्त कोही पूज्य छैन, त्यही महिमावान अर्शको प्रभु हो ।[4]

فَتَعٰلَى اللّٰهُ الْمَلِكُ الْحَقُّ لَآ اِلٰهَ اِلَّا هُوَ رَبُّ الْعَرْشِ الْكَرِيْمِ ﴿١١٦﴾

---

[1]यसबाट तात्पर्य फरिश्ता (स्वर्गदूत) हुन्, जो मनुष्यको कर्म तथा आयु लेख्न नियुक्त छ अथवा त्यो मनुष्य तात्पर्य हो जो हिसाब किताबमा दक्षता राख्दछ । क़ेयामतको भयानकता उनका मस्तिष्कबाट संसारको सुख-सुविधालाई मेटाइदिनेछ तथा संसारको जीवन उनीहरूलाई यस्तो लाग्नेछ जस्तो दिन अथवा आधा दिन । यसकारण उनीहरूले भन्नेछन् कि हामी त एक दिन अथवा त्यसभन्दा पनि कम समय संसारमा रहयौं । निःसन्देह तिमी फरिश्तासित अथवा गणितज्ञहरूसित सोध्न सक्छौ ।

[2]यसको अर्थ हो कि आख़िरतका अस्थाई जीवनको तुलनामा निश्चित रूपले संसारको जीवन अति लघु छ । तर यस विन्दुलाई संसारमा तिमीले जानेनौं । काश, तिमी संसारको यस वास्तविकतासित तथा संसारको अस्थाईत्वसित सतर्क भएको भए आज तिमी पनि ईमानवालाहरू सरह सफल एवं सम्मानित हुने थियौ ।

[3]अर्थात् त्यो यसभन्दा सर्वोपरि छ कि त्यो तिमीलाई निरुद्देश्य रूपले खेलको रूपमा पैदा गरोस् तथा तिमी जे चाहन्छौ गर, तिमीसित त्यसको कुनै सोधपूछ नहोस् । बरु त्यसले तिमीलाई एउटा विशेष उद्देश्यका लागि सृष्टि गरेको छ तथा त्यो हो त्यसको उपासना गर्नु । यसैकारण अगाडी आदेश गर्‍यो कि त्यही पूज्ने योग्य छ, त्यसका अतिरिक्त कोही पूजा योग्य छैन ।

[4]अर्शको विशेषण कृपा भन्यो किनभने त्यहाँबाट कृपा तथा विभूतिहरूको अवतरण हुन्छ ।

وَمَن يَدْعُ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ لَا بُرْهَانَ لَهُ بِهِ فَإِنَّمَا حِسَابُهُ عِندَ رَبِّهِ ۚ إِنَّهُ لَا يُفْلِحُ الْكَافِرُونَ ﴿١١٧﴾

(११७) तथा जो व्यक्ति अल्लाहका साथ कुनै अन्य देवतालाई पुकार्दछ जसबारे उसित कुनै प्रमाण छैन त त्यसको हिसाब त्यसको प्रभुसित नै छ । निःसन्देह काफ़िरहरू मोक्षबाट बञ्चित छन् ।[1]

وَقُل رَّبِّ اغْفِرْ وَارْحَمْ وَأَنتَ خَيْرُ الرَّاحِمِينَ ﴿١١٨﴾

(११८) तथा भन कि हे मेरा प्रभु ! तिमी क्षमा गर तथा कृपा गर तथा तिमी सबै कृपालुहरूभन्दा उत्तम कृपा गर्नेवाला हौ ।

## سُورَةُ النُّورِ

## सूरतुन नूर-२४

सूरः नूर* मदीनामा अवतरित भएको तथा यसका चौसठ्ठी आयतहरू तथा नौं रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

शुभारम्भ अल्लाहको नामबाट जो अति दयालु तथा अत्यन्त कृपालु छ ।

سُورَةٌ أَنزَلْنَاهَا وَفَرَضْنَاهَا وَأَنزَلْنَا فِيهَا آيَاتٍ بَيِّنَاتٍ لَّعَلَّكُمْ تَذَكَّرُونَ ﴿١﴾

(१) यो हो त्यो सूरः जुन हामीले अवतरित गरेका छौं[2] तथा निर्धारित गरिदिएका छौं तथा जसमा हामीले खुल्ला आदेश अवतरित गरेका छौं ताकि तिमी याद राख ।

[1]यसबाट ज्ञात भयो कि भलाई तथा सफलता आख़िरतमा अल्लाहको यातनाबाट वच्नु हो, मात्र संसारका धन तथा सुविधारहरूको अधिकता सफलता होइन, यो त संसारमा काफ़िरहरूलाई पनि प्राप्त छ, तर अल्लाह तआला उनीबाट भलाईलाई नकारिराखेको छ, जसको स्पष्ट अर्थ हो कि मूल रूपले भलाई आख़िरतको भलाई हो, जुन ईमानवालाहरूको भागमा आउनेछ, न सांसारिक धन तथा साधनको अधिकता जुन कि बिना भेदभाव ईमानवाला तथा काफ़िर सबैलाई प्राप्त हुन्छ ।

*सूरः नूर सूरः अहज़ाब तथा सूरः निसा, यी तीनवटै सूरः यस्ता छन् जसमा स्त्रीहरूका विशेष समस्याहरू तथा सामाजिक विषयका जीवनका महत्वपूर्ण विस्तृत जानकारीहरूको वर्णन छ ।

[2]कुरआन करीमका सबै सूरतहरू अल्लाहद्वारा उतारिएका हुन्, तर यस सूरःको विषयमा जुन यो भन्यो त यसबाट यस सूरःमा वर्णित आदेशहरूको महत्वलाई उजागर गर्नु हो ।

(२) व्यभिचार गर्ने स्त्री-पुरुषमध्ये प्रत्येकलाई सय कोर्रा हान ।[1] उनलाई अल्लाहका नियम अनुरूप दण्ड दिंदाखेरि तिमीले कदापि दया गर्नुहुन्न यदि तिमीलाई अल्लाहमाथि तथा केयामतका दिनमाथि ईमान

اَلزَّانِيَةُ وَالزَّانِيْ فَاجْلِدُوْا كُلَّ وَاحِدٍ مِّنْهُمَا مِائَةَ جَلْدَةٍ ۪ وَّلَا تَأْخُذْكُمْ بِهِمَا رَأْفَةٌ فِيْ دِيْنِ اللّٰهِ اِنْ كُنْتُمْ تُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ ۚ

[1]व्यभिचारको प्रारम्भिक दण्ड जुन इस्लाममा अस्थाई रूपले भनिएको थियो, त्यो सूरः निसाको आयत संख्या १५ मा गुज्रिसकेको छ जसमा भनिएको थियो कि जबसम्म यसका लागि कुनै स्थाई दण्ड निर्धारित गरिदैन, ती व्यभिचारी स्त्रीहरूलाई घरहरूमा बन्द राख । अनि जब यो सूरः नूरको यो आयत अवतरित भयो त नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि अल्लाहले जुन वादा गरेको थियो, त्यस अनुसार व्यभिचारी पुरूष-स्त्रीको स्थाई दण्ड निर्धारित गरिदिइएको छ त्यो तिमी मसित सिक, तथा त्यो यो हो कि अविवाहित पुरुष-स्त्रीका लागि प्रत्येकलाई सय-सय कोर्रा तथा विवाहित पुरुष-स्त्रीलाई सय-सय कोर्रा तथा ढुङ्गाहरूले हानी मारिहालून् । (सहीह मुस्लिम किताबुल हूदूद बाब हद्दि अज़्जिना, वस्सुनन) अनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले विवाहित पुरुष-स्त्रीलाई व्यवहारिक रूपले ढुङ्गाहरूबाट मार्नको दण्ड दिनु हो तथा सय कोर्रा (जुन सानो दण्ड हो) ठूलो दण्डमा सम्मिलित गर्नु हो तथा अब विवाहित स्त्री पुरूषको दण्ड केवल ढुङ्गाहरूले हानी मार्नु नै छ । रसूल सल्लल्लाहु अलैहि वसल्लम पश्चात खुल्फाये राशदीन (रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको जीवनमा जुन व्यक्तिहरु ईमान ल्याए तथा उनको अन्त्य पनि ईमानकै अवस्थामा भयो यस्ता मुसलानिहरुलाई सहावा भनिन्छ ।) तथा सहावाहरु (रसूल अल्लाह सल्लल्लाहु अलैहि वसल्लमको साथ जुन व्यक्तिहरू ईमानको मार्गमा लागे तथा उनको अन्त्य पनि ईमानकै अवस्थामा भयो यस्ता मुसलमानहरूलाई सहावा भनिन्छ) को समयमा पनि यही दण्ड दिइयो । तथा उनका पश्चात उम्मतका सबै ज्ञानी र फुकहा पनि यसैलाई मान्नेवाला थिए र आजसम्म छ, केवल ख़वारिज़ले यस दण्डलाई अस्वीकार गरेका छन् तथा उपमहाद्वीपमा पनि केही यस्ता व्यक्तिहरू छन् जो यस दण्डलाई अस्वीकार गर्दछन् । तथा हदीसलाई अस्वीकार गर्नेवालाहरूले पनि यसलाई अस्वीकार गरेका छन् । यस अस्वीकृतिको मूल आधार नै हदीसको अस्वीकृतिमा छ । किनभने पत्थरहरूले हानी मार्नुको दण्ड अत्यन्त युक्तियुक्त हदीसहरूबाट सिद्ध छ । तथा त्यसलाई वर्णित गर्नेहरूको संख्या पनि अति अधिक छ कि आलिमहरूले यसलाई निरन्तर हदीसको श्रेणीमा राखेका छन् । यसकारण हदीसका प्रमाण तथा धर्ममा त्यसको धार्मिक नियमहरूको स्रोत हुने कुरोलाई जुन व्यक्तिले स्वीकार गर्दछ. त्यो ढुङ्गाहरूले हानी मार्नुलाई अस्वीकार गर्नसक्दैन ।

وَلْيَشْهَدْ عَذَابَهُمَا طَائِفَةٌ مِّنَ الْمُؤْمِنِينَ ②

छ ।[1] उनका दण्डको समय मुलमानहरूको एउटा समूह उपस्थित हुनु पर्दछ ।[2]

الزَّانِي لَا يَنكِحُ إِلَّا زَانِيَةً أَوْ مُشْرِكَةً وَالزَّانِيَةُ لَا يَنكِحُهَا إِلَّا زَانٍ أَوْ مُشْرِكٌ ۚ وَحُرِّمَ ذَٰلِكَ عَلَى الْمُؤْمِنِينَ ③

(३) व्यभिचारी पुरूष व्यभिचारिणी स्त्री अथवा मूर्तिपूजक स्त्रीबाहेक अन्यसित विवाह गर्दैन तथा व्यभिचारीणी स्त्री पनि व्यभिचारी पुरूष बाहेक अथवा मूर्तिपूजक पुरूषका अतिरिक्त अन्यसित विवाह गर्दैन । तथा ईमानवालाहरूलाई यो अवैध (हराम) गरिदिइयो ।[3]

[1]यसको अर्थ यो हो कि दयाभावका कारण दण्ड दिनुवाट नरूक, अन्यथा प्राकृतिक रूपले दयाभाव उत्पन्न हुनु ईमानको विपरीत छैन, सारांशत: यो त मनुष्यको प्रकृतिमा नीहित छ ।

[2]ताकि दण्डको मूल उद्देश्य जुन यो हो कि मानिसहरू त्यसवाट शिक्षा ग्रहण गरून्, अत्याधाकि विस्तृत रूपले मानिस शिक्षा प्राप्त गर्नसकून् । दूर्भाग्यले आजकल जनसमूहका समक्ष दण्ड दिनु मानव अधिकारको विरूद्ध भनिदैछ । यो पूर्णरूपले मूर्खता, अल्लाहका आदेशहरूको अवहेलना तथा अर्को शव्दमा अल्लाहभन्दा पनि अधिक मनुष्यहरूसँग सहानुभूति राख्नेवाला शुभचिन्तक वन्नु हो, जवकि वास्तविकता यो हो कि अल्लाहभन्दा अधिक सहानुभूति तथा दया कसैमा छैन ।

[3]यसको भावार्थमा व्याख्याकारहरूमा मतभेद छ। केही भन्दछन् कि यहाँ विवाहसित तात्पर्य प्रचलित विवाह होइन बरु व्यभिचारको अर्थमा छ तथा उद्देश्य व्यभिचारका दुष्परिणाम तथा दुष्कर्मलाई वर्णन गर्नु हो । अर्थ यो हो कि कुकर्मी पुरूष आफ्ना इन्द्रियलाई अनुचित रूपले शान्त गर्नका निम्ति व्यभिचारी स्त्रीतिर तथा त्यसैप्रकार कुकर्मी स्त्री कुकर्मी पुरूषतिर आकर्षित हुन्छे, ईमानवालाहरूका लागि यस्तो गर्नु अर्थात् व्यभिचार निषेध (हराम) छ। तथा मूर्तिपूजक स्त्री-पुरुषको वर्णन यसकारण गरियो कि व्यभिचार पनि मूर्तिपूजाको समतुल्य छ, जसरी मूर्तिपूजक अल्लाहलाई छाडि अन्यका निकट टाउको निहुराउँछ, त्यसैप्रकार व्यभिचारी पुरूष, पत्नीलाई छाडेर अथवा पत्नी आफ्नो पतिलाई छाडेर अन्य मानिसहरूसित घृणित कर्म गर्छे । यसप्रकार मूर्तिपूजक तथा व्यभिचारी बीच एउटा विचित्र आन्तरिक समानता हुन्छ । केही व्याख्याकारहरू भन्छन् कि यो साधारण रीतिका कारण छ तथा अर्थ यो हो कि साधारणतया कुकर्मी मानिस विवाहका निम्ति आफूजस्तै मानिसहरूतिर आकृष्ट हुन्छन् । अत: व्यभिचारीहरूको अधिकतर संख्या व्यभिचारीहरुसँग विवाह गर्न रुचाउँछ तथा

وَالَّذِينَ يَرْمُونَ الْمُحْصَنَٰتِ ثُمَّ لَمْ يَأْتُوا بِأَرْبَعَةِ شُهَدَاءَ فَاجْلِدُوهُمْ ثَمَٰنِينَ جَلْدَةً وَلَا تَقْبَلُوا لَهُمْ شَهَٰدَةً أَبَدًا وَأُولَٰئِكَ هُمُ الْفَٰسِقُونَ ۝٤

(४) तथा जो पवित्र स्त्रीमाथि व्यभिचारको आक्षेप लगाउँछन्, अनि चार गवाह (साक्षी) प्रस्तुत गर्न सक्दैनन् भने उनलाई अस्सी पटक कोर्रा हान तथा कहिले पनि उनका साक्षी स्वीकार नगर। यी दूराचारी व्यक्तिहरू हुन्।[1]

إِلَّا الَّذِينَ تَابُوا مِنۢ بَعْدِ ذَٰلِكَ وَأَصْلَحُوا فَإِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ۝٥

(५) हो, जो यस पश्चात क्षमा माँगेर सुधार गर्दछन्।[2] त अल्लाह (तआ़ला) क्षमा गर्नेवाला तथा दया गर्नेवाला हुनुहुन्छ।

यसको उद्देश्य ईमानवालाहरूलाई सतर्क गर्नु हो कि जसरी व्यभिचार अत्यन्त कुरूप तथा महापाप हो, त्यसरी नै व्यभिचारीहरूसँग वैवाहिक सम्बन्ध स्थापित गर्न पनि मनाही तथा निषेध (हराम) छ। इमाम शौकानीले यस भावार्थलाई अति उत्तम भनेका छन् तथा हदीसहरूमा यसका अवतरण हुने जे-जति कारण वर्णित छ त्यसबाट पनि यसको पुष्टि हुन्छ कि केही सहाबाले व्यभिचारी स्त्रीहरूसित विवाह गर्न आज्ञा चाहे त त्यसपश्चात् यो आयत अवतरित भयो, अर्थात् उनलाई यस्तो गर्नबाट रोकियो। यसैबाट भाव निकाल्दै आलिमहरू (धार्मिक विद्वान) ले भनेका छन् कि एउटा पुरूषले जुन स्त्रीसँग अथवा स्त्रीले जुन पुरुषसँग कुकर्म गरेको छ उनको आपसमा विवाह मान्य छैन। यदि उनीहरू शुद्ध हृदयले क्षमा माँगदछन् त त्यस पश्चात् उनीहरूबीच विवाह मान्य छ। (तफ़सीर इब्ने कसीर)

[1]यसमा قذف (आक्षेप लगाउनु) को दण्ड वर्णित गरिएको छ कि जो व्यक्ति कुनै पवित्र स्त्री अथवा पुरूषमाथि व्यभिचारको आक्षेप लगाउँछ (त्यसैप्रकार जुन स्त्री कुनै पवित्र पुरूष अथवा स्त्रीमाथिको आक्षेप लगाउँछ) तथा प्रमाणस्वरुप चार साक्षी प्रस्तुत गर्न सक्दैनन् भने उनका लागि तीन आदेश वर्णन गरिएका छन् (१) उनीहरूलाई अस्सी कोर्रा हानियोस्, (२) उनका गवाही (साक्षी) कहिल्यै स्वीकार नगरियोस् तथा (३) उनी अल्लाहका समक्ष तथा मानिसहरूका समक्ष दुराचारी हुन्।

[2]क्षमा माँग्नाले त कोर्राहरूका दण्डबाट छुट पाइने छैन, उनीहरू पश्चाताप गरून् अथवा विन्ती गरून्, यो दण्ड त भोग्नु नै पर्नेछ। तर अर्का दुईटा कुरा, गवाहीबाट वञ्चित तथा दूराचारी हुनु त्यसमा मतभेद छ। केही आलिम उसलाई दुराचारी हुनुबाट छुट दिन्छन् अर्थात् क्षमा माँगे पश्चात त्यो दूराचारी रहने छैन। तथा केही व्याख्याकार दुवै वाक्यलाई यसमा सम्मिलित मान्दछन्। अर्थात् क्षमा माँगे पश्चात त्यो गवाही दिन योग्य हुनेछ तथा दूराचारी पनि हुनेछैन। इमाम शौकानीले यसै दोस्रो मतलाई अधिमान दिए

وَالَّذِيْنَ يَرْمُوْنَ اَزْوَاجَهُمْ وَلَمْ يَكُنْ لَّهُمْ شُهَدَاۤءُ اِلَّآ اَنْفُسُهُمْ فَشَهَادَةُ اَحَدِهِمْ اَرْبَعُ شَهٰدٰتٍۢ بِاللّٰهِ ۙ اِنَّهٗ لَمِنَ الصّٰدِقِيْنَ ⑥

(६) तथा जुन मानिसहरू आफ्ना पत्नीहरूमाथि व्यभिचारको आरोप लगाउँदछन् तथा उनका साक्षी उनी बाहेक अन्य कोही हुँदैन त यस्ता मानिसहरू मध्येबाट प्रत्येकको प्रमाण यो हो कि चार पटक अल्लाहको सौगन्ध खाएर भनोस् कि त्यो सत्यवादीहरू मध्येको छ ।

وَالْخَامِسَةُ اَنَّ لَعْنَتَ اللّٰهِ عَلَيْهِ اِنْ كَانَ مِنَ الْكٰذِبِيْنَ ⑦

(७) तथा पाँचौ पटक यो कि त्यसमाथि अल्लाहको धिक्कार होस् यदि त्यो झूठाहरू मध्येबाट छ ।[1]

وَيَدْرَؤُا عَنْهَا الْعَذَابَ اَنْ تَشْهَدَ اَرْبَعَ شَهٰدٰتٍۢ بِاللّٰهِ ۙ اِنَّهٗ لَمِنَ الْكٰذِبِيْنَ ۙ ⑧

(८) तथा त्यस (स्त्री) बाट दण्ड यसप्रकार समाप्त गर्न सकिन्छ कि त्यसले चार पटक अल्लाहको सौगन्ध खाएर भनोस् कि निःसन्देह त्यसको पनि झूठो बोल्नेवालाहरू मध्ये हो ।

وَالْخَامِسَةَ اَنَّ غَضَبَ اللّٰهِ عَلَيْهَا

(९) तथा पाँचौ पटक भनोस् त्यसमाथि अल्लाहको क्रोध (धिक्कार होस्) यदि त्यसका

---

तथा اَبداً को अर्थ वर्णन गरेका छन् कि ماد ام قاذفاً अर्थात् जबसम्म त्यो आक्षेप लगाउनमा स्थिर रहनेछ । जसरी भनिन्छ कि काफ़िरको गवाही (साक्ष्य) कहिल्यै स्वीकृत छैन, त यहाँ कहिलेको अर्थ यही हुनेछ कि जबसम्म त्यो काफ़िर छ ।

[1]यसमा لعـان को समस्याको वर्णन छ जसको अर्थ यो हो कि कुनै पतिले आफ्नी पत्नीलाई आफ्ना आँखाले कुनै अन्यसँग कुकर्म गरिराखेको देख्यो, जसको त्यो त प्रत्यक्षदर्शी छ, परन्तु व्यभिचारका नियमलाई सत्यापित गर्नको लागि चार गवाहहरूको आवश्यकता छ । यसकारण जबसम्म त्यो आफूसँग अन्य तीन गवाह प्रस्तुत गर्दैन, त्यसकि पत्नीमाथि व्यभिचारको नियम लागू हुनसक्दैन । तर आफ्ना आँखाले देखे पश्चात यस्तो दुष्चरित्र पत्नीलाई सहन गर्न पनि असम्भव छ । धार्मिक नियमले यसको यो समाधान प्रस्तुत गरेको छ कि यो व्यक्ति न्यायलयमा अथवा न्यायलयको .अधिकारी समक्ष चार पटक अल्लाहको सौगन्ध खाएर यो भन्नेछ कि त्यो आफ्नी पत्नीमाथि व्यभिचारको आरोप लगाउनमा साँचो छ अथवा यो बालक अथवा गर्व त्यसको होइन । तथा पाँचौ पटक भन्नेछ कि यदि म झूठो छु भने ममाथि अल्लाहको धिक्कार होस् ।

وَاِنۡ كَانَ مِنَ الصّٰدِقِيۡنَ ۝٩

पति सत्यवादी मध्येबाट छ ।[1]

وَلَوۡلَا فَضۡلُ اللّٰهِ عَلَيۡكُمۡ وَرَحۡمَتُهٗ وَاَنَّ اللّٰهَ تَوَّابٌ حَكِيۡمٌ ۝١٠

(१०) तथा यदि अल्लाह (तआ़ला) को कृपा तथा दया तिमीमाथि नभएको भए[2] (त तिमीमाथि दुख अवतरित हुन्थे) तथा अल्लाह (तआ़ला) क्षमालाई स्वीकार गर्नेवाला ज्ञानी छ ।

اِنَّ الَّذِيۡنَ جَآءُوۡ بِالۡاِفۡكِ عُصۡبَةٌ

(११) जो यो निकै ठूलो आक्षेप रचेर ल्याएका छन् ।[3] यो पनि तिमीमध्येबाट एउटा गुट

[1]अर्थात् यदि पतिको उत्तरमा पत्नी चार-चार पटक अल्लाहको सौगन्ध खाएर यो भन्छे कि त्यो झूठो छ तथा पाँचौं पटक भन्दछे कि यदि त्यसको पति साँचो छ (तथा म झूठो छु) त ममाथि अल्लाहको प्रकोप होस् । त यस अवस्थामा त्यो व्यभिचारको दण्डबाट बाँच्नेछ । त्यस पश्चात तीनदुबै बीच सधैंको लागि वियोग (जुदाइ) हुनेछ । यसलाई لعان यसकारण भन्दछन् कि यसमा दुवै आफूलाई झूठा हुने अवस्थामा धिक्कारको पात्र स्वीकार गर्दछन् । नबी सल्लल्लाहु अलैहि वसल्लमको समयमा यस्ता केही घटनाहरू घटित भए जसका वर्णन हदीसहरूमा विद्यमान छन्, तिनै घटनाहरु यस आयतको अवतरणका कारण बने ।

[2]यसको उत्तर लुप्त छ, त तिमीमध्ये झूठामाथि, तुरुन्त अल्लाहको प्रकोप अवतरित हुन्थ्यो, तर त्यो क्षमाशील तथा दूरदर्शी पनि छ । यसकारण एक त उसले पर्दा हालिदियो ताकि त्यसका पश्चात शुद्ध हृदयले क्षमा माँगदछ भने उसले त्यसलाई आफ्नो दयाको छायाँमा पार्नेछ तथा दूरदर्शी पनि छ कि उसले لعان जस्तो समस्याको वर्णन गरेर स्वाभिमानी पतिहरूका लागि अति उचित तथा सरल नियम प्रस्तुत गरिदिएको छ ।

[3]إفـــك बाट तात्पर्य त्यो आरोपको घटना हो जसमा द्वयवादीहरुले आदरणीय आयशा (رضي الله عنها) को सतीत्व एवं सम्मानलाई कलंकित गर्न चाहन्थे । तर अल्लाह तआ़लाले कुरआ़न करीममा आदरणीय आयशा (رضي الله عنها) माथि लगाइएको आक्षेपलाई खण्डन गर्नका लागि आयत अवतरित गरी तिनको पवित्र सतीत्व तथा सम्मानलाई झन् अधिक स्पष्ट गरिदियो । संक्षिप्तमा यो घटना यसप्रकार छ, पर्दाको आदेश पश्चात बनी मुस्तलीकको युद्ध (मुरैसीअ्) बाट फिर्ता हुँदा नबी सल्लल्लाहु अलैहि वसल्लम तथा सहाबाले मदीनाका निकट एउटा स्थानमा विश्राम (पडाव) गरे, प्रातः काल जब त्यहाँबाट प्रस्थान गरे त आदरणीय आयशाको डोली पनि जुन खाली थियो, यात्रीहरूले यो ठानेर ऊँटमाथि राखिदिए कि उम्मुल मोमनीन (मुसलमानहरुकी माता) त्यसभित्र नै हुनुहोला, तथा त्यहाँबाट प्रस्थान गरिदिए जबकि आदरणीय आयशा आफ्नो मालाको खोजीमा बाहिर जानु भएको थियो, फर्केर आउँदा हेर्नुभयो कि यात्रीहरु त गइहालेका छन् । अनि यो सोचेर त्यहीं

مِّنكُمْ ۚ لَا تَحْسَبُوهُ شَرًّا لَّكُم ۖ بَلْ هُوَ خَيْرٌ لَّكُمْ ۚ لِكُلِّ امْرِئٍ مِّنْهُم مَّا اكْتَسَبَ مِنَ الْإِثْمِ ۚ وَالَّذِي تَوَلَّىٰ

हुन्[1] तिमी त्यसलाई आफ्नो लागि नराम्रो नठान, बरु यो त तिम्रो पक्षमा श्रेष्ठ छ।[2] हो, उनीहरूमध्ये प्रत्येकमाथि त्यति पाप छ, जति उसले कमाएको छ, तथा उनीहरूमध्ये जसले निकै

पल्टिराख्नु भयो कि जब उनलाई मेरो अनुपस्थितिको ज्ञान हुनेछ तब मेरो खोजीमा वापस फिर्ता आउनेछन्। अलि बेरमा सफ़वान बिन मोअत्तल सुलमी आए, उहाँको काम यही थियो कि यात्रीहरूका शेष रहने वस्तुहरूलाई संम्हालून्, उनले आदरणीय आयशालाई पर्दाको आदेशभन्दा पूर्व देखेका थिए, तिनलाई देख्नासाथ إنا لله و إنا إليه راجعون पढे तथा बुझिहाले कि यात्रीहरु त्रुटिले अथवा अज्ञानवश आदरणीय मातालाई यहीं छाडेर आगाडी हिंडे। अत: उनले उहाँलाई आफ्नो ऊँटमाथि बसाले तथा स्वयं ऊँटको नकेल समातेर पैदल हिंडी यात्रीहरुमा सम्मिलित भए। द्वयवादीहरूले जब आदरणीय आयशालाई यसप्रकार पछि एक्लै आदरणीय सफ़वानका साथमा आइराखेको देखे त त्यस अवसरलाई अति उचित माने तथा द्वयवादीहरूका मुखिया अब्दुल्लाह बिन उबैयले भने कि यो एकान्त तथा अलगाव अकारण नै होइन तथा यसप्रकार उनले आदरणीय आयशालाई आदरणीय सफ़वानसित कलंकित गरिदिए जबकि दुबै यस कुराबाट बिल्कुलै (सर्वथा) अनभिज्ञ (अन्जान) थिए। केही शुद्ध मुसलमान पनि षड्यन्त्रकारीहरूका बहकाउमा आए। जस्तै आदरणीय हस्सान, मिस्तह बिन असासा तथा हमना बिन्ते ज़हश (अल्लाह उनीहरूसित प्रसन्न होस्) (यस घटनाको पूर्ण विवरण हदीसमा आएको छ) नबी सल्लल्लाहु अलैहि वसल्लम पूरा एक महिना जबसम्म अल्लाह तआलाको तर्फबाट निर्दोषता (सफाई अवतरित भएन) अत्यन्त व्याकुल रहनुभयो तथा आदरणीय आयशा अज्ञानमा आफ्नो ठाउँमा व्याकुल। यी आयतमा अल्लाह तआलाले यसै घटनाको संक्षेपमा परन्तु व्यापक रूपले वर्णन गरेको छ। إفك को अर्थ हो कुनै वस्तुलाई उल्टाइदिनु। यस घटनामा पनि मुनाफ़िकहरु (मौखिक मुसलमानहरु) ले कुरालाई उल्टाइदिएका थिए अर्थात् आदरणीय आयशा (رضي الله عنها) त प्रशंसाकि पात्र हुनुहुन्थ्यो, उच्च वंशीय, तथा स्वच्छ चारित्रिक स्वामिनी हुनुहुन्थ्यो न कि कलंकित गर्न। परन्तु अत्याचारीहरूले यसलाई यस महाचरित्रवान् (साकार सतीत्व) लाई यसका विपरीत आक्षेप तथा आरोपका लक्ष्य बनाए।

[1]एउटा गुट अथवा समूहलाई عُصبة भनिन्छ किनभने उनी एक-अर्काको शक्ति तथा सहायताका कारण हुन्छन्।

[2]किनभने यसबाट एक त तिमीलाई दुख तथा कठिनाईहरुका कारण महा प्रत्युपकार प्राप्त हुनेछ अर्को यो कि आकाशबाट आदरणीय आयशाको पक्षमा आयत अवतरित हुनाले तिनको महानता तथा तिनका परिवारको सम्मान तथा महत्व स्पष्ट भयो। यसका अतिरिक्त ईमानवालाहरुको लागि यसमा शिक्षा ग्रहण गर्नुका अन्य पक्ष छन्।

كِبْرَهُۥ مِنْهُمْ لَهُۥ عَذَابٌ عَظِيمٌ ⑪

ठूलो भागलाई पूरा गरेको छ, त्यसको लागि यातना पनि निकै ठूलो छ ।[1]

لَّوْلَآ إِذْ سَمِعْتُمُوهُ ظَنَّ ٱلْمُؤْمِنُونَ وَٱلْمُؤْمِنَٰتُ بِأَنفُسِهِمْ خَيْرًا وَقَالُوا۟ هَٰذَآ إِفْكٌ مُّبِينٌ ⑫

(१२) त्यसलाई सुन्नासाथ मुसलमान पुरुषहरु तथा स्त्रीहरुले आफ्ना पक्षमा राम्रो विचार किन गरेनन् तथा किन भनेनन् यो त खुल्ला आरोप हो ।[2]

لَّوْلَا جَآءُو عَلَيْهِ بِأَرْبَعَةِ شُهَدَآءَ ۚ فَإِذْ لَمْ يَأْتُوا۟ بِٱلشُّهَدَآءِ فَأُو۟لَٰٓئِكَ عِندَ ٱللَّهِ هُمُ ٱلْكَٰذِبُونَ ⑬

(१३) उनी यसमा चार साक्षी किन ल्याएनन् ? तथा जब साक्षी ल्याएनन् त यी आक्षेप लगाउने व्यक्तिहरू नि:सन्देह अल्लाहका निकट केवल झूठा छन् ।

وَلَوْلَا فَضْلُ ٱللَّهِ عَلَيْكُمْ وَرَحْمَتُهُۥ فِى ٱلدُّنْيَا وَٱلْءَاخِرَةِ لَمَسَّكُمْ فِى مَآ أَفَضْتُمْ فِيهِ عَذَابٌ عَظِيمٌ ⑭

(१४) तथा यदि तिमीमाथि अल्लाह (तआला) को कृपा तथा दया दुनियाँ तथा आख़िरतमा नभएको भए नि:सन्देह तिमीले जुन कुराका चर्चा प्रारम्भ गरेका थियौ, त्यस विषयमा तिमीलाई निकै ठूलो प्रकोप पुग्न थियो ।

إِذْ تَلَقَّوْنَهُۥ بِأَلْسِنَتِكُمْ وَتَقُولُونَ بِأَفْوَاهِكُم مَّا لَيْسَ لَكُم بِهِۦ عِلْمٌ وَتَحْسَبُونَهُۥ هَيِّنًا وَهُوَ عِندَ ٱللَّهِ عَظِيمٌ ⑮

(१५) जबकि तिमी आफ्ना मुखले यसको चर्चा परस्पर गर्नथाले तथा आफ्ना मुखले त्यो कुरो निकाल्न थाले जसबारे तिमीलाई कदापि सूचना थिएन, यद्यपि तिमी त्यसलाई सरल कुरा बुझाउँदै रहयौ, परन्तु अल्लाहका निकट त्यो निकै ठूलो कुरो थियो ।



[1]यसबाट तात्पर्य अब्दुल्लाह बिन उबैय मुनाफ़िकहरुको सरदार हो जो यस षड्यन्त्रको मुखिया थियो ।

[2]यहाँबाट प्रशिक्षणको त्यो पक्ष प्रकट भइराखेको छ जुन यस घटनामा लुप्त छ । यिनमा सर्वप्रथम कुरो यो हो कि ईमानवाला एक प्राण जस्तै छन्, जब आदरणीय आयशामाथि आरोप लगाइयो त तिनीले आफूमाथि ठानेर यसको खण्डन किन गरेन तथा त्यसलाई खुला आक्षेप किन भनिदिएनौ ?

(१६) तथा तिमीले कुरा सुन्नासाथ किन भनिदिएनौ कि हामी यस्ता कुरा मुखबाट निकाल्नु पनि शोभा दिँदैन ? हे अल्लाह ! तिमी पवित्र हौ, यो त निकै ठूलो आक्षेप हो ।[1]

وَلَوْلَآ اِذْ سَمِعْتُمُوْهُ قُلْتُمْ مَّا يَكُوْنُ لَنَآ اَنْ نَّتَكَلَّمَ بِهٰذَا ۖ سُبْحٰنَكَ هٰذَا بُهْتَانٌ عَظِيْمٌ ﴿١٦﴾

[1]दोस्रो कुरो अल्लाह तआलाले ईमानवालाहरुलाई यो बतायो कि यस आक्षेपमा उनले एउटा पनि गवाह प्रस्तुत गरेनन् जबकि यसका लागि चार गवाहको आवश्यकता थियो । यसका उपरान्त तिमीले ती दोषारोपण गर्नेहरुलाई झूठा भनेनौ । यही कारण छ कि यी आयतहरु अवतरित भए पश्चात आदरणीय हस्सान, मिस्तह, तथा हमना बिन्ते ज़हशलाई मिथ्यारोपणको दण्ड दिइयो (मुसनद अहमद भाग ६, पृष्ठ ३०, तिर्मिजी संख्या ३१८१, अबू दाऊद संख्या ४४७४, इब्ने माजा संख्या २५६७) अब्दुल्लाह बिन उबैयलाई यसकारण दण्ड दिइएन कि त्यसको लागि आख़िरतको घोर यातनालाई नै पर्याप्त ठानियो तथा ईमानवालाहरुलाई दण्ड दिएर संसारमा नै पवित्र गरियो । अर्को कुरो त्यसको पछाडी एउटा पूरा जत्था थियो, त्यसलाई दण्ड दिनुमा यस्ता खतरा थिए कि जसबाट सामना गर्नु त्यसबखत मुसलमानहरुका लागि कठिन थियो, यसै कारणवश त्यसलाई दण्ड दिइएन । (फ़तहुल क़दीर)

तेस्रो कुरो यो भनिएको छ कि अल्लाहको कृपा तथा उपकार तिमीमाथि नभएको भए, तिम्रो यो व्यवहार कि खोज नगरिकन अफवाह (किवंदन्ती) लाई अगाडी फैलाउन लाग्यो महाप्रकोपको कारण थियो, यसको अर्थ यो हो कि अफवाह उत्पन्न गर्नु तथा त्यसको प्रचार-प्रसार गर्नु पनि महापाप हो, जसका कारण मानव अति कठोर यातनाको अधिकारी हुनसक्छ ।

चौथो कुरो यो कि कुरो सोझै रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम कि पत्नी तथा तिनको मान-मर्यादाको थियो, परन्तु तिमीले त्यसलाई कुनै महत्व दिएनौं, तथा त्यसलाई तुच्छ ठान्यौ । यसबाट यो बुझाउन उद्देश्य छ कि मात्र सतीत्व हनन नै ठूलो अपराध होइन जसको दण्ड सय कोर्रा अथवा ढुङ्गाहरुले हानि मार्नुछ, वरु कसैको चरित्र तथा मान-सम्मानमाथि आक्रमण गर्नु तथा कुनै सम्मानित परिवारको अपमान तथा उपहासको प्रबन्ध गर्नु पनि अल्लाहका निकट महापाप छ । यसलाई तुच्छ नठान । यसैकारण अगाडी पुनः विशष जोड दिँदै भन्यो कि तिमीले सुन्नासाथ किन भनेनौं कि हामीलाई त्यस्ता कुरा मुखबाट निकाल्न योग्य पनि छैन । यो निःसन्देह महालान्छना हो । यसैकारण इमाम मालिक भन्नुहुन्छ कि जो नामका मुसलमान आदरणीय आयशामाथि आक्षेप आरोपित गर्दछ, त्यो काफ़िर हो किनभने त्यो अल्लाह तथा कुरआनलाई झुठ्लाउँछ । (ऐसरुत्तफ़ासीर)

يَعِظُكُمُ اللّٰهُ اَنْ تَعُوْدُوْا لِمِثْلِهٖٓ اَبَدًا اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ﴿١٧﴾

(१७) अल्लाह तिमीलाई चेतावनी दिन्छ कि पछि कहिल्यै यस्ता काम नगर्नू, यदि तिमी साँचो ईमानवाला हौ ।

وَيُبَيِّنُ اللّٰهُ لَكُمُ الْاٰيٰتِ ۗ وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ﴿١٨﴾

(१८) तथा अल्लाह (तआला) तिम्रा समक्ष आफ्ना आयत वर्णन गरिराखेको छ, तथा अल्लाह (तआला) सर्वज्ञाता तथा तत्वदर्शी छ ।

اِنَّ الَّذِيْنَ يُحِبُّوْنَ اَنْ تَشِيْعَ الْفَاحِشَةُ فِى الَّذِيْنَ اٰمَنُوْا لَهُمْ عَذَابٌ اَلِيْمٌ ۙ فِى الدُّنْيَا وَالْاٰخِرَةِ ۗ وَاللّٰهُ يَعْلَمُ وَاَنْتُمْ لَا تَعْلَمُوْنَ ﴿١٩﴾

(१९) तथा जुन व्यक्तिहरु मुसलमानहरुमा अश्लीलता फैलाउनुका कामना राख्दछन्, उनका लागि संसार र आख़िरतमा दुखदायी यातना छन्,[1] तथा अल्लाह (तआला) सबै कुरो जान्दछ तथा तिमी केही जान्दैनौ ।

وَلَوْلَا فَضْلُ اللّٰهِ عَلَيْكُمْ وَرَحْمَتُهٗ

(२०) तथा यदि तिमीमाथि अल्लाह (तआला) को दया तथा कृपा नभएको भए, तथा यो पनि कि

[1] فاحشة को अर्थ हो निर्लज्जता तथा कुर्आनले व्यभिचारलाई पनि निर्लज्जता भनेको छ (बनी इस्राईल) तथा यहाँ व्यभिचारको एउटा झूठा समाचारको प्रचारलाई पनि अल्लाह तआलाले निर्लज्जता भनेको छ तथा यसलाई संसार तथा आख़िरतका दुखदायी यातनाहरुको कारण भनेको छ जसबाट असभ्यताको विषयमा इस्लामको प्रकृति तथा अल्लाह तआलाको इच्छाको अनुमान हुन्छ कि मात्र असभ्यताको झूठो समाचारको प्रकाशन अल्लाह समक्ष कति ठूलो अपराध हो, त जुन मानिसहरु रात-दिन एउटा इस्लामी समाजमा समाचारपत्रहरु, रेडियो, टि.भी. तथा फिल्मी नाटकद्वारा असभ्यताको प्रचार गरिराखेका छन् र घर-घरमा त्यसलाई पुऱ्याइराखेका छन् अल्लाहकहाँ यिनीहरु कति ठूलो अपराधी हुनेछन् ? तथा ती कार्यालयहरुमा कार्यरत कर्मचारी कुन प्रकारले असभ्यताको प्रचारको अपराधवाट छुटकारा पाउनेछन् ? यसैप्रकार आफ्नो घरमा टि.भी. ल्याएर राख्नेवाला, जसवाट उनका आगामी पुस्तामा असभ्यता फैलाइराखेको छ, ती पनि असभ्यताको प्रचारको अपराधी किन हुने छैनन् ? तथा यही अवस्था निर्लज्ज दैनिक समाचारपत्रहरुको छ कि उनका पनि घरहरुमा आउनु असभ्यताको प्रचारको कारण हो, यो पनि अल्लाहको समक्ष अपराध हुनसक्छ । काश, मुसलमान आफ्ना यी कर्तव्यहरुको आभास गरून् तथा यस असभ्यताको तूफ़ान (प्रचण्डता) लाई रोक्नका निम्ति आफ्नो यथाशक्य प्रयत्न गरून् ।

وَأَنَّ اللَّهَ رَءُوفٌ رَّحِيمٌ ⑳

अल्लाह तआ़ला अति प्रेम गर्ने दयालु छ (त तिमीमाथि प्रकोप आइपुग्ने थियो)[1]

يٰٓأَيُّهَا الَّذِينَ ءَامَنُوا لَا تَتَّبِعُوا خُطُوٰتِ الشَّيْطٰنِ ۚ وَمَن يَتَّبِعْ خُطُوٰتِ الشَّيْطٰنِ فَإِنَّهُۥ يَأْمُرُ بِالْفَحْشَآءِ وَالْمُنكَرِ ۚ وَلَوْلَا فَضْلُ اللَّهِ عَلَيْكُمْ وَرَحْمَتُهُۥ مَا زَكَىٰ مِنكُم مِّنْ أَحَدٍ أَبَدًا وَلٰكِنَّ اللَّهَ يُزَكِّى مَن يَشَآءُ ۗ وَاللَّهُ سَمِيعٌ عَلِيمٌ ㉑

(२१) हे ईमानवालाहरु ! शैतानका पद चिन्हहरुमा नहिंड । जुन व्यक्ति शैतानका पद-चिन्हहरुमा हिंड्छ, त त्यसलाई असभ्य तथा नराम्रा कार्यहरुको नै आदेश दिनेछ । तथा यदि अल्लाह (तआ़ला) को दया एवं कृपा तिमीमाथि नभएको भए, त तिमीमध्ये कोही पनि कहिल्यै पवित्र एवं शुद्ध हुँदैनथ्यो । परन्तु अल्लाह (तआ़ला) जसलाई पवित्र गर्न चाहन्छ,गरिदिन्छ ।[2] तथा अल्लाह (तआ़ला) सर्वश्रोता तथा सर्वज्ञाता छ ।

وَلَا يَأْتَلِ أُولُوا الْفَضْلِ مِنكُمْ وَالسَّعَةِ أَن يُؤْتُوٓا أُولِى الْقُرْبَىٰ وَالْمَسٰكِينَ وَالْمُهٰجِرِينَ فِى سَبِيلِ اللَّهِ ۖ وَلْيَعْفُوا وَلْيَصْفَحُوٓا ۗ أَلَا تُحِبُّونَ أَن يَغْفِرَ اللَّهُ لَكُمْ ۗ

(२२) तथा तिमीमध्ये जो पनि महान् तथा उदार छन्, उनीहरुले आफ्ना निकटसम्बन्धी तथा निर्धन एवं शरणार्थीहरुलाई अल्लाहको मार्गमा दिनुबाट सौगन्ध (कसम) खानु हुँदैन, बरु क्षमा गरिदिनुपर्छ तथा जान दिनुपर्छ । के तिमी चाहँदैनौ कि अल्लाह (तआ़ला) तिम्रा

[1]उत्तर लोप छ, त अल्लाहको प्रकोपले तिमीलाई आफ्नो पकडमा लिइहाल्थ्यो । यो मात्र त्यसको कृपा तथा त्यसको प्रेमभाव एवं दया हो कि त्यसले तिम्रो यस महापापलाई क्षमा गरिदियो ।

[2]यस स्थानमा शैतानको अनुसरणबाट रोक्नुको पश्चात भन्नुभयो कि यदि त्यसको कृपा तथा दया नभएको भए त तिमीमध्ये कोही पनि पवित्र एवं स्वचछ हुन्नथ्यो, यसको अभिप्राय यो प्रतीत हुन्छ कि जुन मानिसहरु उक्त घटना आरोप लगाउनमा सम्मिलित हुनबाट बचे, यो मात्र अल्लाहको कृपा तथा दया हो जुन उनीहरुमाथि, अन्यथा उनीहरु पनि यसै धारमा बगेर जान्थे जसमा केही मुसलमान बगेर गएका थिए । यसकारण शैतानको छल तथा कपटबाट बच्नको लागि एक त हर समय अल्लाहसित सहायता माँगे तथा उसैतिर आकर्षित भइराखे तथा अर्का जुन मानिसहरु आफ्ना इन्द्रियहरुका कमजोरीका कारण शैतानको छलफल तथा कपटका शिकार भएका छन् । उनलाई अधिक धिक्कारको लक्ष्य नबनाउ । बरु शुभ-चिन्तकको रुपमा उनको सुधारको प्रयास गर ।

وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢٢﴾

त्रुटिलाई क्षमा गरिदेओस् ?[1] अल्लाह (तआ़ला) त्रुटिलाई क्षमा गर्ने कृपालु छ ।

إِنَّ الَّذِيْنَ يَرْمُوْنَ الْمُحْصَنٰتِ الْغٰفِلٰتِ الْمُؤْمِنٰتِ لُعِنُوْا فِي الدُّنْيَا وَالْاٰخِرَةِ وَلَهُمْ عَذَابٌ عَظِيْمٌ ﴿٢٣﴾

(२३) जुन मानिसहरु पवित्र, सोझी, ईमान भएकी स्त्रीहरुमाथि आरोप लगाउँछन् उनी संसार तथा आख़िरतमा धिक्कारिने तथा उनका लागि अत्यन्त कठोर यातना छ ।[2]

आदरणीय मिस्तह जो आक्षेपको घटनामा लिप्त थिए निर्धन मुहाजरीनमध्ये थिए, सम्बन्धमा आदरणीय अबु-बक्र सिद्दीकका मौसेरे भाई (आमाकी दिदीको छोरो) थिए, अत: अबु-बक्र उनका संरक्षक तथा जीवनयापनका उत्तरदायी थिए, जब यिनी पनि आदरणीय आयशाका विरुद्ध षड्यन्त्रमा सम्मिलित भए, त अबू-बक्र सिद्दीकलाई अत्यन्त दुख पुग्यो, जुन एउटा प्राकृतिक कुरो थियो । अत: सफाईको आयत अवतरित भए पश्चात क्रोधमा उनले सौगन्ध खाए कि उनी भविष्यमा मिस्तहलाई कुनै लाभ पुऱ्याउने छैनन् । अबू-बक्रको यो सौगन्ध जुन यद्यपि मानव प्रकृतिको अनुरुप नै थियो, परन्तु सिद्दीक आचरण त्यसभन्दा उच्च हुने कुराको माँग गरिराखेको थियो, अल्लाह तआ़लालाई राम्रो लागेन तथा यो आयत अवतरित गऱ्यो, जसमा अत्यन्त प्रेमले उनको यस त्वरित मानवीय प्रतिमा उनलाई चेतावनी दिइयो कि तिमीवाट पनि त्रुटिहरु हुँदै गर्छन् तथा त्यसो भए तिमी पनि अरुहरुसँग त्यसैप्रकार क्षमा तथा पन्छ्याउने मामिला किन गर्दैनौ ? के तिमीलाई प्रिय छैन कि अल्लाह तआ़लाले तिम्रा त्रुटिहरुलाई क्षमा गरोस् ? यो वर्णनको विधि यति प्रभावशाली थियो कि त्यसलाई सुन्नासाथ अबू-बक्र सिद्दीक सहसा पुकारे "किन होइन, हे हाम्रा प्रभु ! हामी अवश्य यो चाहन्छौं कि तिमी हामीलाई क्षमा गरिदेउ ।" त्यस पश्चात उनले आफ्नो सौगन्धको प्रायश्चित गरेर पूर्ववत: मिस्तहलाई धनबाट सहायता गर्न प्रारम्भ गर्नु भयो । (फ़तहुल क़दीर, इब्ने क़सीर)

[2]केही व्याख्याकारहरुले यस आयतलाई आदरणीय आयशा तथा नबी सल्लल्लाहु अलैहि वसल्लमका पवित्र पत्नीहरुसँग (رضي الله عنهن) विशेषरुपले सम्बन्धित भनेका छन् कि यस आयतमा विशेषरुपले उनीमाथि आक्षेप लगाउनुको दण्डको वर्णन गरिएको छ तथा त्यो यो हो कि उनका लागि क्षमा छैन । तथा केही व्याख्याकारहरुले यसलाई जनसामान्यका लागि नै राखेका छन् तथा त्यसमा त्यही आरोप लगाउनुको दण्ड वर्णन गरिएको छ जुन अघि गुज्रिसकेको छ । यदि आक्षेप लगाउनेवाला मुसलमान छ भने धिक्कारको अर्थ हुनेछ कि त्यो दण्डको योग्य छ तथा मुसलमानहरुका लागि अलगावको अधिकारी छ । तथा यदि काफ़िर छ भने भाव स्पष्ट नै छ कि त्यो संसार तथा आख़िरतमा धिक्कारिने अर्थात् अल्लाहको कृपाबाट बञ्चित छ ।

يَوۡمَ تَشۡهَدُ عَلَيۡهِمۡ أَلۡسِنَتُهُمۡ وَأَيۡدِيهِمۡ وَأَرۡجُلُهُم بِمَا كَانُواْ يَعۡمَلُونَ ﴿٢٤﴾

(२४) जबकि उनका समक्ष उनका जिभ्रा तथा उनका हात-खुट्टा उनका कर्महरुका साक्षी हुनेछन् ।[1]

يَوۡمَئِذٖ يُوَفِّيهِمُ ٱللَّهُ دِينَهُمُ ٱلۡحَقَّ وَيَعۡلَمُونَ أَنَّ ٱللَّهَ هُوَ ٱلۡحَقُّ ٱلۡمُبِينُ ﴿٢٥﴾

(२५) त्यस दिन अल्लाह (तआला) उनीहरुलाई पूरा-पूरा प्रतिफल सत्य एवं न्यायका साथ प्रदान गर्नेछ तथा उनीहरु थाहा पाउनेछन् कि अल्लाह (तआला) नै सत्य छ, त्यही प्रकट गर्नेवाला छ ।

ٱلۡخَبِيثَٰتُ لِلۡخَبِيثِينَ وَٱلۡخَبِيثُونَ لِلۡخَبِيثَٰتِۖ وَٱلطَّيِّبَٰتُ لِلطَّيِّبِينَ وَٱلطَّيِّبُونَ لِلطَّيِّبَٰتِۚ أُوْلَٰٓئِكَ مُبَرَّءُونَ مِمَّا يَقُولُونَۖ لَهُم مَّغۡفِرَةٞ وَرِزۡقٞ كَرِيمٞ ﴿٢٦﴾

(२६) कुकर्मी स्त्रीहरु कुकर्मी पुरुषहरुका योग्य छन् तथा कुकर्मी पुरुषहरु कुकर्मी स्त्रीहरुका योग्य छन् तथा पवित्र स्त्रीहरु पवित्र पुरुषहरुका योग्य छन्[2] तथा पवित्र पुरुष पवित्र स्त्रीहरुका योग्य छन्। यस्ता पवित्र मानिसहरुका विषयमा जे-जति बकवास यी (आक्षेप लगाउनेवालाहरु) गरिराखेका छन्, तिनीहरु त्यस कुराबाट निर्दोष छन्, उनका लागि मोक्ष छ तथा सम्मानपूर्वक जीविका छ ।[3]

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لَا تَدۡخُلُواْ بُيُوتًا

(२७) हे ईमानवालाहरु ! आफ्ना घरहरुबाहेक अन्य घरहरुमा प्रवेश नगर जबसम्मकि आज्ञा

[1]जसरी कुरआन करीममा अन्य स्थानहरुमा पनि तथा हदीसहरुमा पनि यो विषय वर्णन गरिएको छ ।

[2]यसको एउटा भावार्थ त यही वर्णन गरिएको छ जुन अनुवादबाट स्पष्ट छ । यस स्थितिमा यो (رضي الله عنها) को समानार्थी आयत हुनेछ, कुकर्मी स्त्री तथा कुकर्मी पुरुषसित व्यभिचारी स्त्री तथा व्यभिचारी पुरुष तथा طيبات तथा طيبون सित तात्पर्य पवित्र स्त्रीहरु तथा पवित्र पुरुष हुनेछन् । अर्को अर्थमा अभद्र कुरा अभद्र पुरुषहरुका लागि तथा अभद्र पुरुष अभद्र कुराका लागि छन् तथा पवित्र कुराहरु पवित्र पुरुषहरुका लागि तथा पवित्र पुरुष पवित्र कुराहरुका लागि छन् तथा अभिप्राय यो हुनेछ कि अभद्र कुरा तिनै पुरुष-महिलाहरु गर्दछन् जो अभद्र हुन्छन् तथा पवित्र कुरा गर्नु पवित्र पुरुषहरु तथा महिलाहरुको व्यवहार हो । यसमा संकेत यस कुरातिर छ कि आदरणीय आयशा ﴿الزَّانِي لَا يَنكِحُ إِلَّا زَانِيَةً﴾ माथि आक्षेप आरोपित गर्नेहरु अपवित्र तथा अभद्र तथा तिनीलाई त्यसबाट निर्दोष मान्नेहरु पवित्र छन्।

[3]यसबाट तात्पर्य स्वर्गको त्यो सुख-सुविधा हो जुन ईमानवालाहरुलाई प्राप्त हुनेछ ।

غَيْرَ بُيُوتِكُمْ حَتّٰى تَسْتَأْنِسُوا وَتُسَلِّمُوا عَلٰٓى اَهْلِهَا ۭ ذٰلِكُمْ خَيْرٌ لَّكُمْ لَعَلَّكُمْ تَذَكَّرُوْنَ ﴿٢٧﴾

प्राप्त गर्दैनौ तथा त्यहाँका निवासीहरुलाई सलाम नगर[1] यही तिम्रा लागि श्रेष्ठतम् छ ताकि तिमी शिक्षा प्राप्त गर्नसक ।[2]

فَاِنْ لَّمْ تَجِدُوْا فِيْهَآ اَحَدًا

(२८) यदि त्यहाँ कोही पनि भेटिंदैन भने त्यस पश्चात आज्ञा प्राप्त नभएसम्म भित्र प्रवेश नगर । तथा

पूर्वका आयतहरुमा व्यभिचार तथा त्यसका दण्डहरुको वर्णन भयो, अब अल्लाह तआला गृह प्रवेशका नियमहरुको वर्णन गरिराखेका छन् ताकि स्त्री-पुरुष मिश्रण नहोस् जुन प्राय व्यभिचार तथा आरोपको कारण बन्दछ, استیناس को अर्थ हो, जानकारी गर्नु, अर्थात् जबसम्म तिमीलाई यो जानकारी हुँदैन कि भित्र को छ तथा त्यसले तिमीलाई भित्र प्रवेशको अनुमति दिइसकेको छ, त्यसबेलासम्म प्रवेश नगर । केही व्याख्याकारहरुले تستانسوا को अर्थ تستأذنوا गरेछन् जस्तो कि अनुवादबाट स्पष्ट छ । आयतमा प्रवेशको आज्ञा माग्नुको वर्णन पहिला तत्पश्चात सलाम गर्नुको वर्णन छ । परन्तु हदीसबाट विदित हुन्छ कि नबी सल्लल्लाहु अलैहि वसल्लम पहिला सलाम गर्नुहुन्थ्यो अनि भित्र प्रवेशको आज्ञा माँग्नुहुन्थ्यो । यसैप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लमको व्यवहार थियो कि तीन पटक आज्ञा माँग्नुहुन्थ्यो यदि कुनै उत्तर प्राप्त हुन्नथ्यो भने उहाँ सल्लल्लाहु अलैहि वसल्लम फर्केर आउनुहुन्थ्यो तथा यो पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमको व्यवहार थियो कि आज्ञा माँगदाखेरि उहाँ सल्लल्लाहु अलैहि वसल्लम ढोकाको दायाँ तथा बायाँतिर उभिनु हुन्थ्यो, ताकि जम्काभेट नहोस् जसबाट बेपर्दगी हुने कुरोको सम्भावना रहन्छ । (हेर्नुस् सहीह बुखारी किताबुल इस्तीज़ान, बाबुल तस्लीम वल इस्तीज़ान सलासन, मुसनद अहमद भाग ३ पृष्ठ १३८, अबू दाऊद किताबुल अदब, बाब कम मर्रतन योसल्लिमु र्रजुलो फ़िल इस्तीज़ाने) यसैप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लमले ढोकामा उभेर भित्र चिहाउनुबाट पनि कडाईका साथ मनाही गर्नुभएको छ, यहाँसम्मकि यदि कुनै व्यक्ति चियाउनेको आँखा पनि फुटालिदिन्छ तैपनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि त्यसमाथि कुनै पाप छैन । (अल-बुख़ारी किताबु दियात बाब मन इत्तलअ फ़ी बैते गैरिही) उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यस कुरालाई पनि अप्रिय भन्नुभयो कि जब भित्रबाट गृह स्वामी सोध्छ, को छ ? त त्यसको उत्तरमा "म हूँ, म हूँ भनियोस् । यसको अर्थ यो हो कि नाम भनेर आफ्नो परिचय गराओस् । (सहीह बुख़ारी किताबुल इस्तीज़ान बाबुन इज़ाक़ाल मन ज़ा ? क़ाल अना, तथा मुस्लिम किताबुल आदाब बाब कराहियत कौलिल मुस्ताजिने अना इज़ाक़ील मन हाज़ा ? तथा अबू दाऊद किताबुल अदब)

[2]अर्थात् कर्म गर । अर्थ यो हो कि आज्ञा प्राप्त गर तथा सलाम गरे पश्चात गृहमा प्रवेश गर, दुबैको लागि सहसा प्रवेश गर्नबाट उत्तम छ ।

فَلَا تَدْخُلُوهَا حَتَّىٰ يُؤْذَنَ لَكُمْ ۖ وَإِن قِيلَ لَكُمُ ارْجِعُوا فَارْجِعُوا ۖ هُوَ أَزْكَىٰ لَكُمْ ۚ وَاللَّهُ بِمَا تَعْمَلُونَ عَلِيمٌ ﴿٢٨﴾

यदि तिमीसित फर्किजानु भनिन्छ भने तिमी फर्किहाल, यही कुरा तिम्रो निम्ति अधिक राम्रो छ, जे-जति तिमी गरिराखेका छौ, अल्लाह (तआ़ला) राम्ररी जान्दछ ।

لَّيْسَ عَلَيْكُمْ جُنَاحٌ أَن تَدْخُلُوا بُيُوتًا غَيْرَ مَسْكُونَةٍ فِيهَا مَتَاعٌ لَّكُمْ ۚ وَاللَّهُ يَعْلَمُ مَا تُبْدُونَ وَمَا تَكْتُمُونَ ﴿٢٩﴾

(२९) हो, जसमा कोही रहँदैन यस्ता घरहरुमा जहाँ तिमीलाई कुनै लाभ अथवा सामान छ भने प्रवेशमा कुनै पाप छैन,[1] तिमी जे-जति पनि गर्दछौ तथा जे लुकाउँछौ अल्लाह (तआ़ला) सबै जान्दछ ।[2]

قُل لِّلْمُؤْمِنِينَ يَغُضُّوا مِنْ أَبْصَارِهِمْ وَيَحْفَظُوا فُرُوجَهُمْ ۚ ذَٰلِكَ أَزْكَىٰ لَهُمْ ۗ إِنَّ اللَّهَ خَبِيرٌ بِمَا يَصْنَعُونَ ﴿٣٠﴾

(३०) मुसलमान पुरुषहरुसित भन कि आफ्ना दृष्टि तलतिर राखून्,[3] तथा आफ्ना गुप्ताङ्गको सुरक्षा राखून् ।[4] यही उनका निम्ति पवित्रता हो, मानिसहरु जे-जति गरिराखेका छन् अल्लाह (तआ़ला) सबैसित अवगत छ ।

[1]यसबाट तात्पर्य कुन घरहरु हुन्, जसमा आज्ञा प्राप्त नगरी प्रवेश गर्नुको आज्ञा प्रदान गरिँदैछ । केही विद्वानहरु भन्छन् कि यसबाट तात्पर्य ती घर हुन् जुन विशेषरुपले अतिथिहरुका लागि अलग बनाइएका हुन्छन्, तिनीहरुमा गृह स्वामीबाट प्रथम पटक आज्ञा लिनु नै पर्याप्त छ । केही भन्दछन् कि यसबाट तात्पर्य सराय (धर्मशाला) हो, जुन यात्रीहरुको लागि हुन्छ अथवा व्यापारीक घर हुन् متاع को अर्थ हो लाभकारी, अर्थात् जसमा तिम्रो लाभ छ ।

[2]यसमा ती मानिसहरुका लागि चेतावनी छ जुन अन्य मानिसहरुका घरहरुमा प्रवेश गर्दाखेरि वर्णित नियमहरुको पालना गर्ने कुरोमा ध्यान दिँदैनन् ।

[3]जब कसैको घरमा प्रवेश गर्नको निम्ति आज्ञा लिनलाई आवश्यक भनियो, त त्यसको साथ-साथै आँखाहरुलाई झुकाइराख्न अथवा बन्द राख्नको आदेश दिइयो, ताकि आज्ञा माँग्नेवाला पनि विशेषरुपले आफ्ना नेत्रहरुमाथि नियन्त्रण राखोस् ।

[4]अर्थात् अनुचित प्रयोगबाट यसलाई बचाउन अथवा यिनलाई यसप्रकार लुकाएर राखून् कि यिनीमाथि कसैको दृष्टि नपरोस्, त्यसका यी दुबै भावार्थ ठीक छन् किनभने दुबै अभिप्राय हुन् । यसका अतिरिक्त दृष्टिको सुरक्षाको प्रथम वर्णन हो किनभने यसमा असावधानी नै गुप्ताङ्गबाट असावधानीको कारण बन्दछ ।

وَقُلْ لِّلْمُؤْمِنٰتِ يَغْضُضْنَ مِنْ اَبْصَارِهِنَّ وَيَحْفَظْنَ فُرُوْجَهُنَّ وَلَا يُبْدِيْنَ زِيْنَتَهُنَّ اِلَّا مَا ظَهَرَ مِنْهَا وَلْيَضْرِبْنَ بِخُمُرِهِنَّ عَلٰى جُيُوْبِهِنَّ ۖ وَلَا يُبْدِيْنَ زِيْنَتَهُنَّ

(३१) तथा मुसलमान स्त्रीहरुसित भन कि उनीहरु पनि आफ्ना दृष्टि तल राखून् तथा आफ्ना सतीत्वको रक्षा गरुन् ।[1] तथा आफ्ना शोभाको प्रदर्शन नगरुन्[2] त्यसबाहेक जुन प्रकट छ ।[3] तथा आफ्ना वक्षस्थलमाथि आफ्ना दुपट्टाहरुलाई पूर्णरुपले फैलाएर राखून्[4] तथा आफ्ना शोभाको

[1]महिलाहरु पनि यद्यपि आँखा तल राख्न तथा गुप्ताङ्गहरुको सुरक्षाको प्रथम आदेशमा सम्मिलित थिए जुन सबै ईमानवालाहरुलाई दिएको छ तथा ईमानवालाहरुमा ईमान भएका महिलाहरु पनि सामान्य रुपले सम्मिलित हुन्छन् । तर यस समस्याको महत्वका अनुरुप यसलाई विशेषरुपले महिलाहरुका लागि पनि पुनः त्यही आदेश दिइराखिएको छ जसको उद्देश्य बलपूर्वक भन्नु हो, केही आलिमहरुले यसबाट भावार्थ निकाल्दै भनेका छन् कि जसरी पुरुषहरुका लागि महिलाहरुलाई हेर्न निषेध छ त्यसरी नै महिलाहरुका लागि पनि हेर्न कदापि निषेध छ । तथा केहीले त्यस हदीसबाट भावार्थ निकाल्दै जसमा आदरणीय आयशाको इथोपियनसको खेल हेर्नुको वर्णन छ, (सहीह बुख़ारी किताबुस सलात, बाबु असहाबिल हेराब फ़िल मस्जिद) बिना काम भावना पुरुषहरुतिर महिलाहरुलाई हेर्नुको आज्ञा दिएका छन् ।

[2]शोभाबाट तात्पर्य वस्त्र तथा आभूषण हो जुन महिलाहरु आफ्ना सुन्दरता एवं सौन्दर्यमा झन् बृद्धिका लागि धारण गर्दछन् जसलाई आफ्ना पतिका निम्ति गर्नमाथि जोड दिइएको छ । जब वस्त्र तथा आभूषणको प्रदर्शन अन्य पुरुषहरु समक्ष महिलाहरुका निम्ति निषेध छ भने शरीर नग्न तथा प्रदर्शित गर्नुको आज्ञा इस्लाममा किन हुनसक्थ्यो ? यो त अवैध तथा निषेध हुनेछ ।

[3]यसबाट तात्पर्य त्यो शोभा तथा शरीरको अङ्ग हो जसलाई छोप्नु तथा पर्दा गर्नु असम्भव हुन्छ, जस्तै कसैलाई कुनै वस्तु दिंदा अथवा त्यसबाट लिंदाखेरि हत्केलाको अथवा हेर्दाखेरि आँखाहरुको प्रदर्शित हुनु । यस सम्बन्धमा हातमा जुन औंठी लगाएको अथवा मेंहदी लगाइएको, आँखामा सुर्मा अथवा गाँजल होस् अथवा वस्त्र तथा शोभालाई लुकाउनको निम्ति जुन नकाब अथवा च्यादर लिइन्छ, त्यो पनि एउटा शोभा नै हो, तैपनि यी शोभाहरु यस्ता हुन् जसका प्रदर्शन आवश्यकताका कारण उपयुक्त छ ।

[4]ताकि टाउको, गर्दन तथा छातीलाई पर्दा हुनसकोस् किनभने उनलाई पनि नँग्न गर्नुको आज्ञा छैन ।

إِلَّا لِبُعُوْلَتِهِنَّ أَوْ اٰبَآئِهِنَّ أَوْ اٰبَآءِ بُعُوْلَتِهِنَّ أَوْ أَبْنَآئِهِنَّ أَوْ أَبْنَآءِ بُعُوْلَتِهِنَّ أَوْ إِخْوَانِهِنَّ أَوْ بَنِيْٓ إِخْوَانِهِنَّ أَوْ بَنِيْٓ أَخَوٰتِهِنَّ أَوْ نِسَآئِهِنَّ أَوْ مَا مَلَكَتْ أَيْمَانُهُنَّ

प्रदर्शन कसैको समक्ष नगरुन्[1] आफ्ना पतिहरुबाहेक[2] अथवा आफ्ना पिताको अथवा आफ्नो ससुराको अथवा आफ्ना पुत्रहरुका अथवा आफ्ना पतिका पुत्रहरुको अथवा आफ्ना भाइहरुका अथवा भतिजाहरुका अथवा आफ्ना भानिजहरुका[3] अथवा आफ्ना मितिनीहरुका[4] अथवा

[1]यो त्यही शोभा (सौन्दर्य प्रसाधन) अथवा सौन्दर्य हो जसलाई प्रदर्शित गर्न यसभन्दा पूर्व निषेधित गरिएको थियो । अर्थात् वस्त्र तथा आभूषण जुन च्यादर (शल) अथवा नक़ाबमुनि हुन्छन् । यहाँ तिनको वर्णन अतिरिक्तको विषयमा आएको छ अर्थात् अमूक-अमूक व्यक्तिहरुका समक्ष यिनको प्रदर्शन उचित छ ।

[2] यिनीहरुमा सूचीक्रममा सर्वोपरि पति छ । यसैले पतिलाई सर्वोपरि पनि गरिएको छ किनकि पत्नीको सम्पूर्ण शोभा पतिको लागि हुन्छ तथा पतिको लागि पत्नीको सम्पूर्ण शरीर उचित छ । यसका अतिरिक्त जुन समीपवर्ती तथा अन्य व्यक्तिहरुको घरमा आउने-जाने रहन्छ तथा निकट सम्बन्धी हुनका कारण अथवा अन्य कारणहरुले प्राकृतिक रुपले उनीतिर काम भावना पनि हुँदैन, जसबाट नराम्रोको सम्भावना हुन्छ, त धार्मिक नियमले यस्ता व्यक्तिहरुका समक्ष जसबाट कुनै भय छैन तथा ती सबै व्यक्तिहरु जससित विवाह अमान्य छ तिनीहरुका समक्ष शोभाको प्रदर्शनको आज्ञा प्रदान छ । यस स्थानमा मामा तथा काकाको वर्णन गरिएको छैन । अधिकांश आलिमहरुका निकट यिनी पनि ती व्यक्ति हुन् जोसित विवाह अमान्य छ जसका समक्ष शोभाको प्रदर्शनको आज्ञा दिइएको छ तथा केहीका निकट यस्तो छैन । (फ़तहुल क़दीर)

[3]पितामा हजुरबा, पितामह, नाना तथा नानाका पिता तथा त्यसभन्दा माथि सबै सम्मिलित छन् । यसैप्रकार ससुरमा ससुरका पिता, बाजे, पितामह माथिसम्म । पुत्रहरुमा पौत्र, परपौत्र, नाति परनाति तलसम्म । पतिका पुत्रहरुमा पौत्र तथा परपौत्र तलसम्म, भाइहरुमा तीनै प्रकारका भाइ (साखै, पितातिरबाट, मातातिरबाट) तथा तिनका पुत्र, पौत्र, परपौत्र, नाति, तलसम्म । भतिजहरुमा उनका छोराहरु तलसम्म तथा भानिजहरुमा तीनै प्रकारका बहिनीहरुको सन्तान सम्मिलित छन् ।

[4]यसबाट तात्पर्य मुसलमान महिलाहरु हुन् जसलाई यस कुरोबाट रोकिएको छ कि तिनीहरु कुनै स्त्रीको शोभा, सुन्दरता, तथा सौन्दर्य एवं शारीरिक बनौट एवं रचनाको आफ्ना पतिको समक्ष वर्णन गरुन् । केही विद्वानहरुले यसबाट ती विशेष स्त्रीहरु तात्पर्य लिएका छन् जो सेवा आदिका लागि हर समय साथमा रहन्छन् जसमा दासीहरु पनि सम्मिलित छन् ।

أَوِ التّٰبِعِيْنَ غَيْرِ أُولِي الْإِرْبَةِ مِنَ الرِّجَالِ أَوِ الطِّفْلِ الَّذِيْنَ لَمْ يَظْهَرُوْا عَلٰى عَوْرٰتِ النِّسَآءِ ۖ وَلَا يَضْرِبْنَ بِأَرْجُلِهِنَّ لِيُعْلَمَ مَا يُخْفِيْنَ مِنْ زِيْنَتِهِنَّ ۚ وَتُوْبُوْٓا إِلَى اللّٰهِ جَمِيْعًا أَيُّهَ الْمُؤْمِنُوْنَ لَعَلَّكُمْ تُفْلِحُوْنَ ﴿٣١﴾

दासहरु[१] अथवा नोकरहरुमा यस्ता पुरुषहरुका समक्ष जसलाई कामुकता[२] नहोस् अथवा यस्ता बच्चाहरुका समक्ष जो स्त्रीहरुका पर्दाका कुराको विषयमा जान्दैनन्[३] तथा यसप्रकारले ठूलो आवाज आउने गरी खुट्टा बजारेर नहिंडून् ताकि उनीहरुको लुकेको श्रृङ्गारको थाहा होस् ।[४] तथा हे मुसलमानहरु ! तिमी सबै अल्लाहका दरबारमा क्षमा माँग ताकि तिमी मोक्ष पाउन सक ।[५]

---

[१]केही विद्वानहरुले यसबाट तात्पर्य दासीहरु तथा केहीले दास लिएका छन् तथा केहीले दुबै । हदीसमा छ कि दासबाट पर्दाको आवश्यकता छैन । (अबू दाऊद किताबुल लिवास बाब फ़िल अब्द यनजुरु इला शआरे मौलातेही) यसैप्रकार केहीले सामान्य नै राखेका छन् जसमा ईमानवाला तथा काफ़िरहरु दुबै दास सम्मिलित छन् ।

[२]केही विद्वानहरुले यसबाट केवल त्यही व्यक्ति तात्पर्य लिएका छन् जसका घरमा रहनु, खानु-पिउनुको अतिरिक्त कुनै अन्य उद्देश्य छैन । केहीले मूर्ख, केहीले नपुशंक तथा हिजडा तथा केहीले अत्याधिक बृद्ध अर्थ लिएका छन् । इमाम शौकानी भन्नुहुन्छ कि जसमा कुर्आनमा वर्णित गुण पाईन्छन्, ती सबै यसमा सम्मिलित छन् तथा अन्य अलग्ग हुनेछन् ।

[३]तिनीहरुबाट यस्ता बालक अलग्ग हुनेछन् जो वयस्क हुन्छन् अथवा वयस्क अवस्थाका निकट हुन्छन् किनकि उनीहरु स्त्रीहरुका गुप्ताङ्गसित परिचित हुन्छन् ।

[४]ताकि खुट्टाको आभूषणको झन्कारबाट पुरुषहरुको ध्यान त्यसतिर आकर्षित नहोस् । यस अन्तंगत अग्लो सैन्डल पनि आउँछ जसलाई महिलाहरु लगाएर हिंड्छन्, अनि टक-टकको आवाज हुन्छ, जुन आभूषणहरुको ध्वनिभन्दा कम हुँदैन । यसैप्रकार हदीसमा वर्णित छ कि स्त्रीका लागि सुगन्ध लगाएर घरबाट निस्कन उचित छैन, जुन महिला यस्तो गर्दछन्, तिनी व्यभिचारिणी हुन् । (तिर्मिज़ी अबवाबुल इस्तीज़ान र अबू दाऊद किताबुल तर्रज्जुल)

[५]यहाँ पर्दाका आदेशहरुमा क्षमा माँग्नुको आदेश दिनुमा यो दूरदर्शिता प्रतीत हुन्छ कि अज्ञानकालमा यी आदेशहरुको जुन अवहेलना पनि तिमी गर्दैरहेका छौ, ती इस्लामका पूर्वका कुरा थिए, यदि तिमीले शुद्ध हृदयले क्षमा माँग्यौ तथा यी वर्णित आदेशहरु अनुरुप पर्दाको प्रबन्ध गर्‍यौ भने भलाई तथा सफलता तथा संसार एवं आख़िरतको भलाई (कल्याण) तिम्रो भाग्य हो ।

(३२) तथा तिमीमध्ये जुन पुरुष-स्त्री यौवन अवस्थामा पुगिसकेका छन्, तिनीहरुको विवाह गरिदेउ[1] तथा आफ्ना सदाचारी दास-दासीहरुको पनि,[2] यदि उनी निर्धन पनि हुनेछन् भने अल्लाह (तआला) आफ्नो कृपाले धनवान बनाइदिनेछ ।[3] अल्लाह (तआला) उदार तथा ज्ञानवाला छ ।

وَأَنكِحُوا الْأَيَامَىٰ مِنكُمْ وَالصَّالِحِينَ مِنْ عِبَادِكُمْ وَإِمَائِكُمْ ۚ إِن يَكُونُوا فُقَرَاءَ يُغْنِهِمُ اللَّهُ مِن فَضْلِهِ ۗ وَاللَّهُ وَاسِعٌ عَلِيمٌ ﴿٣٢﴾

(३३) तथा ती मानिसहरु पवित्र रहनुपर्छ जो आफ्ना विवाह गर्नुको सामर्थ्य

وَلْيَسْتَعْفِفِ الَّذِينَ لَا يَجِدُونَ نِكَاحًا

[1] أيامى बहुवचन हो أيم को । أيم यस्तो स्त्रीलाई भनिन्छ जसको पति छैन, जसमा कुमारी, विधवा तथा तलाक (पारपाचुके) प्राप्त तीनटै सम्मिलित छन् तथा यस्तो पुरुषलाई पनि أيم भन्दछन् जसको पत्नी छैन । आयतमा संरक्षकहरुसित सम्बोधन छ कि विवाह गरिदेउ, यो भनिएन कि विवाह गरिहाल । यसबाट ज्ञात भयो कि स्त्री संरक्षकको आज्ञा तथा प्रसन्नता बिना बिहे गर्न सक्दैन जसको पुष्टि हदीसहरुबाट पनि हुन्छ । यसैप्रकार आज्ञावाचकको आधारमा केही विद्वानहरुले यो अर्थ निकालेका छन् कि विवाह गर्न आवश्यक (अनिवार्य) छ, जबकि केहीले यसलाई अनुमत (मुबाह) तथा केहीले उत्तम (मुस्तहब) भनेका छन् परन्तु शक्ति सम्पन्नका लागि सुन्नत मुअक्किद: (बलपूर्वक सुन्नत) तथा कहिले आवश्यक छ तथा यसबाट विमुख हुने कडा चेतावनीको कारण हो । नबी सल्लल्लाहु अलैहि वसल्लमको कथन छ ومن رغب عن سنتي فليس مني "जसले मेरो सुन्नतबाट मुख फर्कायो त्यो मसित छैन ।" (अल-बुखारी संख्या ५०६३ तथा मुस्लिम संख्या १०२०)

[2] यहाँ صالحين सित तात्पर्य ईमान छ । यसमा मतभेद छ कि स्वामी आफ्ना दास-दासीहरुलाई विवाह गर्नका लागि बाध्य गर्न सक्छन् अथवा सक्दैनन् ? केही विद्वान बाध्य गर्नुका पक्षमा छन्, केही छैनन् । परन्तु हानिको सम्भावना छ भने धार्मिक नियमहरुका अनुसार बाध्य गर्नु उचित छ, अन्य परिस्थितिमा अवैध (ऐसरुत्तफ़ासीर)

[3] अर्थात् मात्र निर्धनता तथा धनको कमी विवाहमा बाधक हुनुहुँदैन । संभव छ कि विवाह पश्चात अल्लाह तिनीहरुको निर्धनतालाई आफ्नो कृपा तथा दयाले सुख-सम्पन्नतामा परिवर्तित गरिदेओस् । हदीसमा वर्णित छ तीन प्रकारका यस्ता व्यक्ति छन् जसलाई अल्लाह अवश्य सहायता गर्दछ, एउटा विवाह गर्नेलाई जुन सदाचारको भावनाले विवाह गर्दछ, दोस्रो स्वाधीनता-पत्र प्राप्त दास, जो धन तिर्ने विचार राख्दछ र तेस्रो अल्लाहको मार्गमा धर्मयुद्ध गर्नेवाला । (तिर्मिजी अबवाब फ़ज़ायेलिल जिहाद, बाब माजाअ फ़िल मुजाहिद वल मुकातिब वल निकाह)

حَتّٰى يُغْنِيَهُمُ اللّٰهُ مِنْ فَضْلِهٖ ؕ وَالَّذِيْنَ يَبْتَغُوْنَ الْكِتٰبَ مِمَّا مَلَكَتْ اَيْمَانُكُمْ فَكَاتِبُوْهُمْ اِنْ عَلِمْتُمْ فِيْهِمْ خَيْرًا ۖ وَّاٰتُوْهُمْ مِّنْ مَّالِ اللّٰهِ الَّذِيْۤ اٰتٰىكُمْ ؕ وَلَا تُكْرِهُوْا فَتَيٰتِكُمْ عَلَى الْبِغَآءِ اِنْ اَرَدْنَ تَحَصُّنًا لِّتَبْتَغُوْا عَرَضَ الْحَيٰوةِ

राख्दैनन् ।[1] यहाँसम्मकि अल्लाह (तआला) आफ्नो कृपाले उनलाई धनवान बनाइदेओस् । तिम्रा दासहरुमध्ये जो कोही तिमीलाई केही दिएर स्वाधीनताले गराउन चाहन्छ त तिमी उनीलाई यस्तो लेख दिने गर जसमा तिमीलाई तिनमा कुनै भलाई देखिन्छ ।[2] तथा अल्लाहले जुन सम्पत्ति तिमीलाई दिएको छ, त्यसबाट उनीहरुलाई पनि देउ ।[3] तिम्रा दासीहरु जो पवित्र रहन चाहन्छन्, उनीहरुलाई सांसारिक जीवनका लाभका कारण

[1]हदीसमा पवित्रताका लागि, जबसम्म विवाहको सामर्थ्य हुँदैन, ऐच्छिक ब्रत (नफ़ली रोज़ा) बस्नमा जोड दिइएको छ, आदेश छ: हे नवयुवकहरुका समूह ! तिमीमध्ये जो विवाहको शक्ति राख्दछ, त्यसले (आफ्नो समयमा) विवाह गरिहाल्नुपर्छ, यसकारण कि यसबाट नेत्रहरुको तथा योनिहरुको रक्षा हुन्छ तथा जो विवाहको शक्ति राख्दैनन्, उनलाई आवश्यक छ कि त्यो (अधिकतर ऐच्छिक) ब्रत राखोस्, ब्रत त्यसको काम भावनालाई नियन्त्रणमा राख्नेछ । (अल-बुख़ारी किताबुस सौम, बाब अस्सौम लेमन ख़ाफ अला नफ्सेही अज़ूब:, मुस्लिम अव्वल किताबुल निकाह)

[2] مكاتب त्यस दासलाई भनिन्छ जो आफ्नो स्वामीसित सन्धि गर्दछ कि म यति राशि एकत्रित गरी भुक्तानी गर्नेछु त स्वतन्त्रताको अधिकारी हुनेछु । भलाई देख्नुको अर्थ हो त्यसको सत्यता तथा निक्षेपमा तिमीलाई विश्वास होस् अथवा कुनै व्यवसाय तथा उद्योग सम्बन्धी त्यसलाई जानकारी होस् ताकि त्यसले परिश्रम गरी धनोपार्जन गरोस् तथा धनको राशिको भुक्तानी गर्न सकोस् । इस्लामले अधिकभन्दा अधिक दासताका विरुद्ध नीति अपनाएको थियो । अत: यहाँपनि स्वामीहरुलाई बलपूर्वक भनिएको छ कि स्वाधीनता लेख इच्छुक दासहरुसित सन्धि गर्नुमा आलस्य नगर, जबकि तिमीलाई उनमा यस्ता गुणको ज्ञान छ जसबाट तिम्रो राशिको भुक्तानीको सम्भावना हुनसक्छ। केही धार्मिक गुरुहरुका निकट यो आदेशको पालन अनिवार्य तथा केहीका निकट उत्तम छ ।

[3]यसको अर्थ हो कि दासताबाट मुक्तिको निम्ति त्यसले जुन सन्धि गरेको छ तथा अब धनराशिको त्यसलाई आवश्यकता छ ताकि सन्धि अनुसार त्यो राशिको भुक्तानी गरोस्, त तिमी पनि त्यससित आर्थिक सहायता गर, यदि अल्लाहले तिमीलाई यस योग्य बनाएको छ । अत: अल्लाहले ज़कातको राशिको प्रयोग गर्न जुन आठ प्रकार (सूर: अल-तौबा-६०) मा वर्णन गरेको छ, ती मध्ये एउटा وفي الرقاب पनि हो । जसका अर्थ हो, गर्दनमुक्त गराउनमा अर्थात् दासहरुको स्वाधीनतामा पनि ज़कात (धर्मदान) को राशि व्यय गर्न सकिन्छ ।

الدُّنْيَا ۚ وَمَن يُكْرِههُّنَّ فَإِنَّ اللَّهَ مِن بَعْدِ إِكْرَاهِهِنَّ غَفُورٌ رَّحِيمٌ ﴿٣٣﴾

कुकर्मका लागि बाध्य नगर ।[1] तथा जो तिनीहरुलाई बाध्य गर्नेछ त अल्लाह (तआला) तिनीहरुलाई विवश गरिए पश्चात अत्यन्त क्षमाशील दयावान छ ।[2]

وَلَقَدْ أَنزَلْنَا إِلَيْكُمْ آيَاتٍ مُّبَيِّنَاتٍ وَمَثَلًا مِّنَ الَّذِينَ خَلَوْا مِن قَبْلِكُمْ وَمَوْعِظَةً لِّلْمُتَّقِينَ ﴿٣٤﴾

(३४) तथा हामीले तिमीतिर खुल्ला आयतहरु उतारेका छौं तथा ती मानिसहरुका उदाहरण (प्रस्तुत गरेका छौं) जो तिमीहरुभन्दा पूर्व गुज्रिसकेका छन् तथा परहेजगारहरुका लागि शिक्षा (पनि) ।

اللَّهُ نُورُ السَّمَاوَاتِ وَالْأَرْضِ ۚ مَثَلُ

(३५) अल्लाह आकाशहरुको तथा धर्तीको दिव्य ज्योति हो[3] त्यसको ज्योतिको उदाहरण एउटा



[1]अज्ञानकालमा मानिसहरु मात्र सांसारिक धन अर्जित गर्नका लागि आफ्ना दासीहरुलाई व्यभिचारका लागि बाध्य गर्दथे । चाहे अथवा नचाहे पनि त्यसले यो अपमानको कलङ्क सहनु पर्थ्यो । अल्लाह तआलाले मुसलमानहरुलाई यस्तो गर्नबाट रोकेको छ । إِنْ أَرَدْنَ संभावित परिस्थितिहरुको आधारमा छ । अन्यथा उद्देश्य यो होइन कि यदि त्यसले व्यभिचारलाई प्रिय ठान्दछ भने तिमीले उनीहरुबाट यो कार्य गराइहाल । बरु यो आदेश दिनुको उद्देश्य हो कि दासीहरुबाट संसारका अलिकति धनका लागि यो कुकर्म नगर, किनभने यसप्रकारको धन आर्जन नै निषेध छ ।

[2]अर्थात् जुन दासीहरुबाट बलपूर्वक व्यभिचार गराइनेछ, त्यसमा पापी स्वामी हुनेछ अर्थात बाध्य गर्नेवाला, न कि दासी जुन अबला छ । हदीसमा वर्णित छ, मेरो सम्प्रदायबाट त्रुटि, भूल तथा यस्ता कार्य जुन बलपूर्वक गराइएका हुन्छन्, क्षमा छन् । (इब्ने माजा किताबुत तलाक बाब तलाकिल मुकरहे वन्नासी)

[3]अर्थात् यदि अल्लाह नभएको भए, न आकाशमा प्रकाश हुन्थ्यो न धर्तीमा, न आकाश तथा धर्तीमा कसैलाई सन्मार्ग सुलभ हुन्थ्यो । अत: त्यो अल्लाह (तआला) नै आकाश तथा धर्तीलाई प्रकाश प्रदान गर्नेवाला हो । त्यसको किताब दिव्य ज्योति हो, त्यसको रसूल (आफ्ना गुणहरुका आधारमा) दिव्य ज्योति हो । अर्थात यी दुबैका माध्यमबाट जीवनको अन्धकारमा मार्गदर्शन तथा प्रकाश प्राप्त हुन्छ, जसरी दीप अथवा बल्बबाट मनुष्य प्रकाश प्राप्त गर्दछ । हदीसबाट पनि अल्लाहको दिव्य ज्योति हुनु सिद्ध छ । «وَلَكَ الْحَمْدُ أَنْتَ نُورُ السَّمٰوَاتِ وَالْأَرْضِ وَمَنْ فِيهِنَّ» (सहीह बुखारी बाबुत तहज्जुदे बिल्लैल तथा मुस्लिम किताबु सलातिल मुसाफिरीन बाबुद्दुआ फी सलातिल लैल) अत: अल्लाह स्वयं साक्षात दिव्य ज्योति हो, त्यसको पर्दा दिव्य ज्योति छ तथा प्रत्येक भौतिक तथा आत्मिक दिव्य ज्योतिको

نُوْرِهٖ كَمِشْكٰوةٍ فِيْهَا مِصْبَاحٌ ؕ اَلْمِصْبَاحُ فِيْ زُجَاجَةٍ ؕ اَلزُّجَاجَةُ كَاَنَّهَا كَوْكَبٌ دُرِّيٌّ يُّوْقَدُ مِنْ شَجَرَةٍ مُّبٰرَكَةٍ زَيْتُوْنَةٍ لَّا شَرْقِيَّةٍ وَّلَا غَرْبِيَّةٍ ۙ يَّكَادُ زَيْتُهَا يُضِيْٓءُ وَلَوْ لَمْ تَمْسَسْهُ نَارٌ ؕ نُوْرٌ عَلٰى نُوْرٍ ؕ يَهْدِى اللّٰهُ لِنُوْرِهٖ مَنْ يَّشَآءُ ؕ وَيَضْرِبُ اللّٰهُ الْاَمْثَالَ لِلنَّاسِ ؕ وَاللّٰهُ بِكُلِّ شَىْءٍ عَلِيْمٌ ۙ

खोपिको जस्तो छ जसमा दीप (चिराग) छ तथा दीप शीशाको फानुसमा छ तथा शीशा टल्किराखेको प्रकाशमान ताराको जस्तो छ तथा त्यो दीप पवित्र वृक्ष ज़ैतूनको तेलबाट बालिएको छ, जुन वृक्ष न पूर्वी छ न पश्चिमी (स्वयं त्यो तेल नै सम्भव छ कि प्रकाश दिन थालोस्, यद्यपि त्यसलाई आगोले नछोएको होस्, ज्योतिमाथि ज्योति छ,[1] अल्लाह (तआला) आफ्नो दिव्य ज्योतितिर जसलाई चाहन्छ[2] मार्गदर्शन गर्दछ। मानिसहरुलाई बुझाउनको निम्ति अल्लाह तआला यी उदाहरण दिइराखेको छ।[3] तथा अल्लाह तआला प्रत्येक वस्तुको स्थितिसित पूर्णरुपले परिचित छ।

स्रष्टा तथा प्रदान गर्नेवाला एवं त्यसतिर मार्गदर्शन गर्नेवाला केवल एक अल्लाह छ। (ऐसरुत्तफ़ासीर)

[1]अर्थात् जसरी एउटा खोपीमा यस्तो दीप जुन काँचको फानुसमा छ त्यसमा एउटा शुभ वृक्षको यस्तो शुद्ध तेल हालिएको छ कि त्यो बिना आगोको स्वयं प्रकाशित हुनुको निकट छ। यसैप्रकार यी सारा प्रकाश एउटा खोपीमा एकत्रित भए तथा त्यो सर्वथा दिव्य प्रकाश बने। यसप्रकार अल्लाहको प्रत्येक तर्क तथा युक्तिहरुको दशा छ कि ती स्पष्ट पनि छन् तथा एकसे-एक बढी पनि दिव्य ज्योतिमाथि ज्योति छन्। जुन न पूर्वी छ न पश्चिमीको अर्थ हो, त्यो वृक्ष यस्तो खुल्ला मैदान तथा मरुस्थलमा छ कि त्यसमाथि घाम मात्र सूर्य उदाउनेबेला अथवा अस्ताउने समयमा मात्र पर्दैन, बरु पूरा दिन घाममा रहन्छ तथा यस्तो वृक्षको फल अति स्वादिष्ट हुन्छ तथा यसबाट तात्पर्य ज़ैतूनको वृक्ष हो जसको फल तथा तेल भोजनको रुपमा पनि प्रयोग हुन्छ, तथा दीपमा तेलको रुपमा पनि प्रयोग हुन्छ।

[2]दिव्य ज्योतिसित तात्पर्य ईमान तथा इस्लाम हो, अर्थात् अल्लाह तआला जसको अन्तर आत्मामा प्रेम तथा त्यसलाई प्राप्त गर्नुका लागि रुचि देख्दछ, तिनलाई यस दिव्य ज्योतितिर मार्गदर्शन गर्दछ जसबाट उनका लागि धर्म तथा संसारका सफलताहरुका द्वार खुल्दछन्।

[3]जुनप्रकारले अल्लाह तआलाले यो उदाहरण दियो जसमा उसले ईमानलाई तथा आफ्ना ईमानवाला भक्तहरुका हृदयमा यसको संचित हुने कुरो तथा भक्तहरुका हृदयको स्थितिबाट अवगत हुनलाई स्पष्ट गऱ्यो कि को मार्गदर्शनको पात्र छ त को छैन।

प्रत्येक वस्तुको स्थितिसित पूर्णरुपले परिचित छ ।

فِي بُيُوتٍ أَذِنَ اللَّهُ أَن تُرْفَعَ وَيُذْكَرَ فِيهَا اسْمُهُ يُسَبِّحُ لَهُ فِيهَا بِالْغُدُوِّ وَالْآصَالِ ﴿٣٦﴾

(३६) ती घरहरुमा जसलाई उच्च पार्न तथा त्यहाँ आफ्नो नाम स्मरण गर्न अल्लाहले आदेश दिएको छ,[1] त्यहाँ बिहान तथा बेलुका अल्लाह (तआला) को महिमाको वर्णन गर्दछन् ।[2]

[1]जब अल्लाह तआलाले ईमानवालाहरुका हृदयलाई तथा त्यसमा जुन ईमान तथा मार्गदर्शन तथा ज्ञान छ, त्यसको यस्तो दीपसित तुलना गरेको छ जुन काँचको झाड (फानुस) मा होस् तथा जुन स्वच्छ, शुद्ध तेलले प्रकाशित होस्, त्यसपछि अव त्यसको स्थान वर्णन गरिंदैछ कि यो 'फानुस' यस्ता घरहरुमा छन् जसका विषयमा आदेश दिइएको छ कि तिनलाई उच्च गरियोस् तथा तिनमा अल्लाहको वर्णन गरियोस् । तात्पर्य मस्जिदहरु हुन्, जुन अल्लाहको धर्तीमा अत्याधिक प्रिय छन् । उच्चको तात्पर्य मात्र ढुङ्गा तथा ईटाहरुको उच्चता होइन बरु यसमा मस्जिदहरुलाई मलीनता, बकवास तथा अनुचित कुरा एवं कर्महरुबाट पवित्र राख्न पनि सम्मिलित छ । अन्यथा मात्र मस्जिदहरुलाई उच्च एवं भव्य बनाइदिन सबैकुरा होइन बरु हदीसमा मस्जिदहरुलाई अधिक अलंकृत गर्नबाट रोकिएको छ । तथा एउटा हदीसमा त यसलाई क़यामत निकट हुने कुरोका लक्षणहरुमध्ये एउटा लक्षण भनिएको छ । (अबू दाऊद किताबुस्सलात बाबुन फ़ी बिनाइल मसाजिद) यसका अतिरिक्त जसरी मस्जिदहरुमा व्यापार तथा व्यवसाय एवं हल्ला गर्न निषेध छ किनकि यो मस्जिदको मूल उद्देश्यको विपरीत छ । त्यसैप्रकार अल्लाहको स्मरण गर्नमा यो कुरा पनि सम्मिलित छ कि केवल एक अल्लाहको वर्णन गरियोस् त्यसैको उपासना गरियोस्, मात्र त्यसैलाई सहायताका निम्ति पुकारियोस् ।

﴿وَأَنَّ الْمَسَاجِدَ لِلَّهِ فَلَا تَدْعُوا مَعَ اللَّهِ أَحَدًا﴾

"मस्जिदहरु अल्लाहका लागि हुन्, अत: अल्लाहको साथमा कसैलाई नपुकार ।" (सूर: जिन्न-१८)

[2]'तस्बीह' सित तात्पर्य नमाज़ हो । آصال बहुवचन हो أصيل को, अर्थ हो सन्ध्या । अर्थात् ईमानवालाहरु, जसका ईमान तथा मार्गदर्शनले प्रकाशित हुन्छन्, बिहान-बेलुका मस्जिदहरुमा अल्लाहका प्रसन्नताका लागि नमाज़ पढ्दछन् तथा त्यसको उपासना गर्दछन् ।

رِجَالٌ لَّا تُلْهِيهِمْ تِجَارَةٌ وَلَا بَيْعٌ عَن ذِكْرِ اللَّهِ وَإِقَامِ الصَّلَاةِ وَإِيتَاءِ الزَّكَاةِ يَخَافُونَ يَوْمًا تَتَقَلَّبُ فِيهِ الْقُلُوبُ وَالْأَبْصَارُ ﴿٣٧﴾

(३७) यस्ता मानिसहरु[1] जसलाई व्यापार तथा क्रय-विक्रय अल्लाहको वर्णनबाट तथा नमाज़ स्थापित गर्न तथा ज़कात दिनबाट अचेत गर्दैन, त्यस दिनसित तर्सन्छन् जुन दिन धेरै हृदय तथा धेरै आँखा विकल (उल्टो-पाल्टो) हुनेछन् ।[2]

لِيَجْزِيَهُمُ اللَّهُ أَحْسَنَ مَا عَمِلُوا وَيَزِيدَهُم مِّن فَضْلِهِ ۗ وَاللَّهُ يَرْزُقُ مَن يَشَاءُ بِغَيْرِ حِسَابٍ ﴿٣٨﴾

(३८) यस उद्देश्यले ताकि अल्लाह तआला उनीहरुलाई उनका कर्मको श्रेष्ठतम प्रतिफल देओस् तथा आफ्नो कृपाले केही अधिक नै प्रदान गरोस् । तथा अल्लाह (तआला) जसलाई चाहन्छ अंगणित वृत्तिहरु (जीविका) दिन्छ ।[3]

وَالَّذِينَ كَفَرُوا أَعْمَالُهُمْ كَسَرَابٍ بِقِيعَةٍ يَحْسَبُهُ الظَّمْآنُ مَاءً حَتَّىٰ

(३९) तथा काफ़िरहरुका कर्म त्यस टल्किराखेको मृगतृष्णा जुन खुल्ला मैदानमा होस् जसलाई तिर्खाएको व्यक्ति टाढाबाट पानी ठान्दछ, परन्तु

[1]यसबाट अर्थ निकालिएको छ कि यद्यपि महिलाहरु मस्जिदहरुमा गई नमाज़ पढ्न सक्छन्, तर साधारण वस्त्रहरुमा, सुगन्ध नलगाईकन तथा पर्दाका साथ हुन्छन् भने जाऊन्, जस्तो कि नबी सल्लल्लाहु अलैहि वसल्लमका रिसालत कालमा महिलाहरु मस्जिदे नबवीमा नमाज़को लागि उपस्थित हुने गर्दथे तर उनीहरुको लागि घरमा नमाज़ पढ्न अति उत्तम एवं सर्वश्रेष्ठ छ । हदीसमा पनि यस कुराको वर्णन गरिएको छ । (अबू दाऊद, किताबुस्सलात, बाबुल तशदीद फ़ी ज़ालिक, मुसनद अहमद भाग ६, पृष्ठ २९७ तथा ३०१)

[2]अर्थात् अति घबराहटका कारण । जस्तो कि अन्य स्थानमा छ ।

﴿ وَأَنذِرْهُمْ يَوْمَ الْآزِفَةِ إِذِ الْقُلُوبُ لَدَى الْحَنَاجِرِ كَاظِمِينَ ﴾

"उनीहरुलाई क़ेयामतका दिनबाट तर्साउ, जुन दिन मुटु घाँटीसम्म आउनेछन् शोकले भरिएको अवस्थामा ।" (सूर: अल-मोमिन-१८)

प्रारम्भमा यो हृदयको अवस्था सबैको हुनेछ, ईमानवालाहरुको तथा काफ़िरहरुको पनि ।

[3]क़ेयामतका दिन ईमानवालाहरुलाई उनका पुण्यको प्रतिफल أضعافا مضاعفة (कैयन् गुनाको रुपमा प्रदान गरिनेछ तथा अधिकतरलाई बिना हिसाब नै स्वर्ग दिइनेछ तथा त्यहाँ जीविकाको जुन अधिकता तथा त्यसमा जुन नवीनता एवं स्वाद हुनेछ, त्यसको त अनुमान नै गर्न सकिन्न ।

إِذَا جَآءَهُۥ لَمْ يَجِدْهُ شَيْـًٔا وَوَجَدَ ٱللَّهَ عِندَهُۥ فَوَفَّىٰهُ حِسَابَهُۥ ۗ وَٱللَّهُ سَرِيعُ ٱلْحِسَابِ ﴿٣٩﴾

जब त्यसको निकट पुग्दछ त त्यसलाई केही पनि पाउँदैन। हो, अल्लाहलाई आफ्नो निकट पाउँछ जो त्यसको हिसाब पूरा-पूरा चुक्ता गर्दछ।[1] अल्लाह (तआला) अति शीघ्र हिसाब गरिदिनेवाला छ।

أَوْ كَظُلُمَـٰتٍ فِى بَحْرٍ لُّجِّىٍّ يَغْشَىٰهُ مَوْجٌ مِّن فَوْقِهِۦ مَوْجٌ مِّن فَوْقِهِۦ سَحَابٌ ۚ ظُلُمَـٰتٌۢ بَعْضُهَا فَوْقَ بَعْضٍ إِذَآ أَخْرَجَ يَدَهُۥ لَمْ يَكَدْ يَرَىٰهَا ۗ وَمَن لَّمْ يَجْعَلِ ٱللَّهُ لَهُۥ نُورًا فَمَا لَهُۥ مِن نُّورٍ ﴿٤٠﴾

(४०) अथवा अन्धकारका समान छ, जुन अति गहिरो समुद्रमा छन् जसलाई माथि तल्लाका धाराहरुले ढाकेका छन्, अनि माथिबाट बादलहरु छाएका हुन्छन्। अर्थात् ती एउटा माथि अर्को भई अन्धकार छन्। जब आफ्ना हात निकाल्दछ त त्यसलाई पनि संभवत: देख्न सक्दैन,[2] र (कुरो यो छ कि) जसलाई अल्लाह (तआला) नै

---

[1] أعمال (कर्म) सित तात्पर्य ती कर्म हुन् जसलाई काफ़िर तथा मूर्तिपूजक पुण्य ठहराएर गर्दछन्, जस्तै दान-दक्षिणा, सम्बन्धीहरुसँग स्वभाव, अल्लाहको घरको निर्माण, तथा हाजीहरुको सेवा आदि। سَراب (मृगतृष्णा) त्यस टल्किराखेका बालुवाका कणलाई भन्छन् जुन टाढाबाट सूर्यका किरणहरुका कारण पानी प्रतीत हुन्छन् سَراب को अर्थ हिंड्नु पनि हो। ती बालुवाका कण बगिराखेको पानीको जस्तो देखिन्छ। قيعة बहुवचन हो قاع को, जसको अर्थ हो धर्तीको होंचो भाग, जसमा पानी बस्दछ अथवा समतल मैदान। यी काफ़िरहरुका कर्मका उपमा हो कि जसरी मृगतृष्णा टाढाबाट पानी देखिन्छ, जबकि त्यो बालुवाका कण नै हुन्छन्। यसैप्रकार काफ़िरका कर्म ईमान नहुनुका कारण अल्लाह समक्ष बिल्कुलै भार विहीन हुनेछन्, तिनका कुनै पनि फल उनीहरुलाई प्राप्त हुनेछैन। परन्तु जब त्यो अल्लाह समीप जानेछ त त्यो त्यसका कर्महरुका प्रतिफल पूरा-पूरा दिइसकेको हुनेछ।

[2] यो दोस्रो उपमा हो कि उनका कर्म अन्धकारका समान छन्, अर्थात उनलाई मृगतृष्णासित उपमा देउ अथवा अन्धकारसित। अथवा पूर्वको उपमा काफ़िरहरुको कर्मको थियो तथा यो त्यसको कुफ्रको उपमा हो, जसमा काफ़िर आफ्नो पूरा जीवनमा घेरिएको हुन्छ, कुफ्र तथा मार्गका अन्धकार, नराम्रा कर्म तथा मित्थ्यावादी विश्वासका अन्धकार तथा प्रभुसित तथा त्यसको आख़िरतको यातनासित एकदम अज्ञानताको अन्धकार। यी अन्धकार त्यसलाई मार्गदर्शनतिर आउन दिंदैनन् जसरी अन्धकारमा मनुष्यलाई आफ्ना हात देखाइ दिंदैन।

प्रकाश दिँदैन त्यसको समीप कुनै प्रकाश हुँदैन ।[1]

(४१) के तपाईंले देख्नुभएन कि आकाश तथा धर्तीका सबै सृष्टि तथा पखेटा फैलाइ उड्नेवाला सबै पंक्षी[2] अल्लाहका महिमागानमा लीन छन् । प्रत्येकको नमाज़ तथा महिमागान त्यसलाई ज्ञात छ ।[3] तथा मानिसहरु जे-जति गर्दछन्, त्यसबारे अल्लाह राम्ररी अवगत छ ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ يُسَبِّحُ لَهُ مَن فِي السَّمَاوَاتِ وَالْأَرْضِ وَالطَّيْرُ صَافَّاتٍ ۖ كُلٌّ قَدْ عَلِمَ صَلَاتَهُ وَتَسْبِيحَهُ ۗ وَاللَّهُ عَلِيمٌ بِمَا يَفْعَلُونَ ﴿٤١﴾

[1]अर्थात् संसारमा ईमान तथा इस्लामको प्रकाश सुलभ हुँदैनथ्यो तथा आख़िरतमा पनि ईमानवालाहरुलाई प्राप्त हुने दिव्य-ज्योतिबाट उनी बञ्चित रहनेछन् ।

[2] صافات को अर्थ हो باسطات तथा यसको कर्मकारक أجنحتها लोप छ । आफ्ना पखेटा फैलाएको । من في السماوات والأرض मा पंक्षी पनि सम्मिलित थिए । तर यहाँ उनको अलग्गैबाट वर्णन गर्‍यो, यसकारण कि पंक्षी सबै जीवधारी पशुहरुमा एउटा महत्वपूर्ण सृष्टि हो जुन अल्लाहको पूर्ण शक्तिले आकाश तथा धर्तीका मध्ये वायुमण्डलमा उड्दै अल्लाहको महिमाको वर्णन गर्दछन् । यो सृष्टि उड्ने शक्ति पनि राख्दछ जसबाट अन्य जीवधारी बञ्चित छन् तथा धर्तीमा हिंड्डुल गर्ने शक्ति पनि राख्दछ ।

[3]अर्थात् अल्लाहले प्रत्येक सृष्टिको मनमा यो ज्ञान हालिदिएको छ कि त्यो अल्लाहको महिमाको वर्णन कसरी गरोस् । जसको अर्थ यो हो कि यो भाग्य अथवा संयोगको कुरा होइन बरु आकाश तथा धर्तीको प्रत्येक वस्तुलाई अल्लाहको प्रशंसा गर्न तथा नमाज़ पूरा गर्न यो पनि अल्लाहको सामर्थ्यको एउटा द्योतक हो, जसरी तिनको सृष्टि अल्लाहको एक विचित्र कलाकारी हो, जसमाथि अल्लाहको अतिरिक्त कसैको सामर्थ्य छैन ।

[4]अर्थात् धर्तीमा भएका तथा आकाशमा भएका जसरी अल्लाहका आदेशहरुको पालन तथा त्यसको प्रशंसा गर्दछन्, सबै उसको ज्ञानमा छ, यो जस्तो कि मनुष्य तथा जिन्नहरुलाई चेतावनी छ कि तिमीलाई अल्लाहले बुद्धि तथा विचारको स्वतन्त्रता प्रदान गरेको छ, त तिमीलाई अन्य सृष्टिको अपेक्षा अधिक प्रशंसा तथा महिमाको वर्णन तथा त्यसको आज्ञा पालन गर्नुपर्दछ । तर वास्तविकता यसको विपरीत छ । अन्य सृष्टि त अल्लाहको प्रशंसामा संलग्न छन् । परन्तु बुद्धि तथा ज्ञानबाट शुशोभित सृष्टि यसमा आलस्य गरिराखेको छ, जसमा निःसन्देह उनी अल्लाहको पकडमा अधिकारी हुनेछन् ।

وَلِلَّهِ مُلْكُ السَّمَٰوَٰتِ وَالْأَرْضِ ۖ وَإِلَى اللَّهِ الْمَصِيرُ ﴿٤٢﴾

(४२) धर्ती तथा आकाशको राज्य अल्लाहको हो तथा अल्लाह (तआला) तिर नै फर्कि जानुपर्नेछ ।[1]

أَلَمْ تَرَ أَنَّ اللَّهَ يُزْجِي سَحَابًا ثُمَّ يُؤَلِّفُ بَيْنَهُ ثُمَّ يَجْعَلُهُ رُكَامًا فَتَرَى الْوَدْقَ يَخْرُجُ مِنْ خِلَالِهِ ۚ وَيُنَزِّلُ مِنَ السَّمَاءِ مِنْ جِبَالٍ فِيهَا مِنْ بَرَدٍ فَيُصِيبُ بِهِ مَنْ يَشَاءُ وَيَصْرِفُهُ عَنْ مَنْ يَشَاءُ ۖ يَكَادُ سَنَا بَرْقِهِ يَذْهَبُ بِالْأَبْصَارِ ﴿٤٣﴾

(४३) के तपाईंले देख्नुभएन कि अल्लाह (तआला) बादलहरुलाई चलाउँछ, फेरि उनीहरुलाई आपसमा संयोग गराईदिन्छ, अनि उनीहरुलाई तहमाथि तह पारिदिन्छ । त्यस पश्चात तपाईं देख्नुहुन्छ कि उनका मध्येबाट वर्षा हुन्छ । त्यही (अल्लाह) आकाशबाट–असिनाको पर्वतबाट असिना वर्षाउन्छ,[2] अनि जसलाई चाहन्छ उनीहरुलाई त्यसको पासमा वर्षाउँछ तथा जसलाई चाहन्छ त्यसबाट तिनीहरुलाई हटाईदिन्छ ।[3] बादलहरुबाट नै निस्कने तडित (चट्याङ्ग) को चमक यस्तो हुन्छ कि जस्तो आँखाको दृष्टि नै लगिदिन्छ ।[4]

[1]अत: त्यही मूल स्वामी हो तथा त्यही सत्य पूज्य हो जसको अतिरिक्त कसैको पनि पूजा (उपासना) मान्य छैन । त्यसैछेउ, सबैलाई फर्केर जानुछ, जहाँ प्रत्येकको न्यायपूर्वक निर्णय दिनेछ ।

[2]यसको एउटा अर्थ त यही हो जुन अनुवादमा प्रयोग गरिएको छ कि आकाशमा पहाड जस्तै देखिने बादलहरु छन् जसबाट त्यो असिनाको वर्षा गर्दछ । (इब्ने कसीर) दोस्रो अर्थ यो वर्णन गरिएको छ कि سماء उचाईंको अर्थमा छ तथा جبال को अर्थ हो ठूला-ठूला टुक्रा पर्वतहरु जस्तै अर्थात् अल्लाह तआला आकाशबाट वर्षा मात्र गर्दैन बरु माथिबाट जब चाहन्छ हिउँका ठूला-ठूला टुक्रा पनि वर्षाउँछ (फतहुल कदीर) अथवा पर्वत जस्तै ठूला-ठूला बादलहरुबाट असिना वर्षाउँछ ।

[3]अर्थात् ती असिना तथा वर्षा कृपा स्वरुप जसलाई चाहन्छ, पुऱ्याउँछ तथा जसलाई चाहन्छ, तिनीबाट बञ्चित राख्दछ । अथवा अर्थ यो हो कि असिनाको वर्षाको प्रकोपबाट जसलाई चाहन्छ, पीडित गर्दछ, जसबाट त्यसका फसलहरु नाश तथा खेती बरवाद हुन्छ तथा जसमाथि आफ्नो कृपा गर्न चाहन्छ, उनलाई त्यसबाट बचाउँछ ।

[4]अर्थात् बादलहरुबाट चम्किने तडित, जुन सामान्यत: वर्षाको शुभ-सूचक हुन्छ, त्यसमा यति तीव्र चमक हुन्छ कि त्यो नेत्रहरुको दृष्टि समाप्त गरिदिनको निकट हुन्छ । यो पनि उसको कारीगरीको नमूना हो ।

يُقَلِّبُ اللّٰهُ الَّيْلَ وَالنَّهَارَ ؕ اِنَّ فِیْ ذٰلِكَ لَعِبْرَةً لِّاُولِی الْاَبْصَارِ ﴿۴۴﴾

(४४) अल्लाह तआला नै दिन-रातको फेरबदल गर्दछ ।[1] आँखावालाहरुका लागि निःसन्देह यसमा ठूला-ठूला शिक्षाहरु छन् ।

وَاللّٰهُ خَلَقَ كُلَّ دَآبَّةٍ مِّنْ مَّآءٍ ۚ فَمِنْهُمْ مَّنْ يَّمْشِیْ عَلٰی بَطْنِهٖ ۚ وَمِنْهُمْ مَّنْ يَّمْشِیْ عَلٰی رِجْلَيْنِ ۚ وَمِنْهُمْ مَّنْ يَّمْشِیْ عَلٰۤی اَرْبَعٍ ؕ يَخْلُقُ اللّٰهُ مَا يَشَآءُ ؕ اِنَّ اللّٰهَ عَلٰی كُلِّ شَیْءٍ قَدِيْرٌ ﴿۴۵﴾

(४५) सबै हिंड्डुल गर्ने जीवधारीलाई अल्लाह (तआलाले) पानीबाट सृष्टि गरेको छ । तिनीहरुमध्ये केही आफ्नो पेटको सहाराले घस्रेर हिंड्छन्,[2] केही दुई खुट्टाको बलले हिंड्छन्,[3] केही चार खुट्टा टेकी हिंड्छन् ।[4] अल्लाह (तआला) जे चाहन्छ सृष्टि गर्दछ ।[5] निःसन्देह अल्लाह (तआला) प्रत्येक वस्तुमाथि सामर्थ्य राख्दछ ।

لَقَدْ اَنْزَلْنَاۤ اٰيٰتٍ مُّبَيِّنٰتٍ ؕ وَاللّٰهُ يَهْدِیْ مَنْ يَّشَآءُ اِلٰی صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿۴۶﴾

(४६) निःसन्देह हामीले प्रकाशमय तथा खुल्ला आयतहरु, अवतरित गरेका छौं । अल्लाह (तआला) जसलाई चाहन्छ, सोझो बाटो देखाउँछ ।[6]

---

[1]अर्थात् कहिले दिनहरु ठूला, रातहरु साना तथा कहिले यसका विपरीत अथवा कहिले दिनको प्रकाशलाई बादलहरुको अन्धकारमा तथा रात्रिको अँध्यारालाई चन्द्रमाको प्रकाशमा परिवर्तित गरिदिन्छ ।

[2]जसरी सूर्य, माछा तथा अन्य धर्तीमा चल्ने किरा-फट्याङग्राहरु छन् ।

[3]जस्तो मनुष्य तथा पंक्षी छन् ।

[4]जस्तो सबै चौपाया तथा अन्य जीव छन् ।

[5]यो संकेत यस कुरातिर छ कि केही जीव यस्ता पनि छन्, जो चारभन्दा पनि बढी खुट्टावाला छन्, जस्तै गँगटा, माकुरा, शंखे कीरा तथा धेरैजसो धर्तीका किराहरु ।

[6] آيات مبينات सित तात्पर्य कुरआन करीम छ, जसमा प्रत्येक त्यस कुराको वर्णन छ जसको सम्बन्ध मनुष्यका धर्म तथा व्यवहारसित छ जसमाथि त्यसको भलाई (कल्याण) तथा सफलता आधारित छ ।

﴿مَا فَرَّطْنَا فِی الْكِتٰبِ مِنْ شَیْءٍ﴾

"हामीले किताबमा कुनै कुराको वर्णनमा कमी गरेनौं ।" (सूरःअल-अनआम-३८)

وَيَقُولُونَ آمَنَّا بِاللَّهِ وَبِالرَّسُولِ وَأَطَعْنَا ثُمَّ يَتَوَلَّىٰ فَرِيقٌ مِّنْهُم مِّن بَعْدِ ذَٰلِكَ ۚ وَمَا أُولَٰئِكَ بِالْمُؤْمِنِينَ ﴿٤٧﴾

(४७) तथा भन्दछन् कि हामीले अल्लाह (तआला) तथा रसूलमा ईमान ल्यायौं (विश्वास गर्‍यौं) तथा आज्ञाकारी भयौं, अनि उनीमध्ये एउटा गुट त्यस पश्चात पनि मुख फर्काउन्छ । यी ईमानवाला हुँदै होइनन् ।[1]

وَإِذَا دُعُوا إِلَى اللَّهِ وَرَسُولِهِ لِيَحْكُمَ بَيْنَهُمْ إِذَا فَرِيقٌ مِّنْهُم مُّعْرِضُونَ ﴿٤٨﴾

(४८) तथा जब यिनीहरु यस कुरातिर बोलाइन्छन् कि अल्लाह तथा त्यसका रसूल (तिनका विवाद) लाई निर्णय गरिदेऊन्, तैपनि उनको एउटा गुट विमुख भईदिन्छ ।

وَإِن يَكُن لَّهُمُ الْحَقُّ يَأْتُوا إِلَيْهِ مُذْعِنِينَ ﴿٤٩﴾

(४९) तथा यदि अधिकार उनलाई पुग्दछ भने आज्ञाकारी भई त्यसतर्फ आउँछन् ।[2]

أَفِي قُلُوبِهِم مَّرَضٌ أَمِ ارْتَابُوا أَمْ يَخَافُونَ أَن يَحِيفَ اللَّهُ عَلَيْهِمْ وَرَسُولُهُ ۚ بَلْ أُولَٰئِكَ

(५०) के उनीहरुको हृदयमा रोग छ ? अथवा यिनीहरु शंका तथा सन्देहमा परेका छन् ? अथवा उनीहरुलाई यस कुराको भय छ कि अल्लाह तआला तथा त्यसका रसूल उनका अधिकारहरुको हनन

---

जसलाई मार्गदर्शन सुलभ हुन्छ, अल्लाह तआला त्यसलाई उचित दृष्टि तथा सत्य हृदय प्रदान गर्दछ, जसबाट त्यसको मार्गदर्शनको बाटो खुल्दछ । صراط مستقيم सित तात्पर्य यही मार्गदर्शन हो जसमा कुनै त्रुटि छैन त्यसलाई अपनाई मनुष्य आफ्नो लक्ष्य स्वर्गसम्म पुग्दछ ।

[1]यो द्वयवादीहरु (मुनाफ़िकहरु) को वर्णन हो, जो मुखले इस्लामको प्रदर्शन गर्दथे तथा हृदयमा कुफ्र तथा ईर्ष्या राख्दथे अर्थात् 'सत्य विश्वास' सित बञ्चित थिए । यसकारण मुखले ईमानको प्रदर्शन पश्चात तिनका ईमानको इन्कार गरिएको छ ।

[2]उनीहरुलाई विश्वास हुन्छ कि नबी सल्लल्लाहु अलैहि वसल्लमको न्यायलयबाट जुन निर्णय हुनेछ, त्यसमा कुनै प्रकारको पश्चाताप हुनेछैन, यसकारण त्यहाँ आफ्ना वाद (तर्क) लग्नबाटै पन्छिन्छन् । हो, यदि उनीहरु जान्दछन् कि उनीहरु सत्यमा छन् तथा उनैका पक्षमा न्याय हुने कुराको पूर्ण विश्वास छ, त त्यहाँ फेरि प्रसन्नतापूर्वक जान्छन् । إذعان को अर्थ हुन्छ स्वीकार आज्ञा पालन एवं अधीनता ।

هُمُ الظّٰلِمُوْنَ ﴿٥٠﴾

नगरिदेऊन् ? कुरा यो छ कि यिनीहरु स्वयं नै ठूलो अत्याचारी छन् ।[1]

إِنَّمَا كَانَ قَوْلَ الْمُؤْمِنِيْنَ إِذَا دُعُوْٓا إِلَى اللّٰهِ وَرَسُوْلِهٖ لِيَحْكُمَ بَيْنَهُمْ أَنْ يَّقُوْلُوْا سَمِعْنَا وَأَطَعْنَا ۚ وَأُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿٥١﴾

(५१) ईमानवालाहरुको कथन त यो हो कि जब उनीहरुलाई यसकारण बोलाइन्छ कि अल्लाह तथा त्यसका रसूल उनीहरुमा निर्णय गरिदेऊन् त उनी भन्छन् कि हामीले सुन्यौं तथा मान्यौं ।[2] यी व्यक्तिहरु नै सफल हुनेवाला हुन् ।

وَمَنْ يُّطِعِ اللّٰهَ وَرَسُوْلَهٗ وَيَخْشَ اللّٰهَ وَيَتَّقْهِ فَأُولٰٓئِكَ هُمُ الْفَآئِزُوْنَ ﴿٥٢﴾

(५२) तथा जो व्यक्तिहरु पनि अल्लाह (तआ़ला) तथा त्यसका रसूलको आज्ञाको पालन गर्दछन्, अल्लाहको भय राख्दछन् तथा (त्यसको यातनाबाट) तर्सन्छन्, तिनीहरु मोक्ष प्राप्त गर्नेवाला हुन् ।[3]

[1]जब निर्णय उनका विरुद्ध हुने सम्भावना हुन्छ त त्यसबाट विमुख हुने र बच्नका कारण वर्णन गरिंदैछ कि या त उनका हृदयमा कुफ्र तथा भेदको रोग छ अथवा उनीहरुलाई मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको नबूअतमा सन्देह छ अथवा यस कुराको सम्भावना छ कि उनीमाथि अल्लाह तथा त्यसका रसूल अत्याचार गर्नेछन्, यद्यपि उनीहरुको तर्फबाट अत्याचारको कुनै सम्भावना नै छैन । बरु वास्तविकता यो हो कि उनीहरु स्वयं अत्याचारी छन् । इमाम शौकानी भन्नुहुन्छ कि 'जब न्याय तथा निर्णयका लागि त्यसता अधिकारी अथवा न्यायधीशतिर बोलाइन्छ, जो न्याय तथा कुर्आन एवं सुन्नतको ज्ञानी छ, त त्यसको पासमा जानु अनिवार्य छ । परन्तु यदि त्यो न्यायधीश किताब एवं सुन्नतको ज्ञान तथा तिनका तर्कहरुबाट अनभिज्ञ छ भने त्यसको पासमा निर्णयका लागि जानु आवश्यक छैन ।' (फ़तहुल क़दीर)

[2]यो काफ़िर तथा द्वयवादीको सापेक्ष ईमानवालाहरुको व्यवहार तथा कर्महरुको वर्णन हो ।

[3]अर्थात् भलाई एवं सफलताको अधिकारी केवल ती मानिसहरु हुनेछन् जो आफ्ना सबै समस्याहरुका लागि अल्लाह तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका निर्णयलाई प्रसन्न हृदयले स्वीकार गर्दछन् तथा तिनैको अनुपालन गर्दछन् तथा संयम एवं अल्लाहको भयले युक्त छन्, न कि अन्य मानिसहरु जो यी गुणहरुबाट बञ्चित छन् ।

وَأَقْسَمُوا بِاللَّهِ جَهْدَ أَيْمَانِهِمْ لَئِنْ أَمَرْتَهُمْ لَيَخْرُجُنَّ ۖ قُل لَّا تُقْسِمُوا ۖ طَاعَةٌ مَّعْرُوفَةٌ ۚ إِنَّ اللَّهَ خَبِيرٌ بِمَا تَعْمَلُونَ ﴿٥٣﴾

(५३) तथा उनीहरु अति दृढताका साथ अल्लाह (तआ़ला) को कसम खाइ-खाइ भन्दछन्[1] कि तपाईंको आदेश हुनासाथै निस्कि उभिनेछन् । भनिदिनुस् कि कसम नखाउ, तिम्रो आज्ञा पालन (को आवश्यकता) विदित छ । [2]जे-जति तिमी गरिराखेका छौ, अल्लाह तआ़ला त्यससित परिचित छ ।[3]

قُلْ أَطِيعُوا اللَّهَ وَأَطِيعُوا الرَّسُولَ ۖ فَإِن تَوَلَّوْا فَإِنَّمَا عَلَيْهِ مَا حُمِّلَ وَعَلَيْكُم مَّا حُمِّلْتُمْ ۖ وَإِن تُطِيعُوهُ تَهْتَدُوا ۚ وَمَا عَلَى الرَّسُولِ إِلَّا الْبَلَاغُ الْمُبِينُ ﴿٥٤﴾

(५४) भनिदिनुस् कि अल्लाह (तआ़ला) का आदेशको पालना गर, रसूलको अनुकरण गर, तैपनि यदि तिमीले मुख फर्कायौ भने रसूलको कर्तव्य त केवल त्यही छ, जुन उसमाथि अनिवार्य गरिएको छ ।[4] तथा तिमीलाई त्यसको उत्तरदायित्व छ जुन तिमीमाथि

---

[1] جهد أيمانهم मा جهد लुप्त क्रियाको धातु हो, जुन जोड दिनका लागि हो अथवा यो दशावाची हो । यसकारण त्यसमाथि 'अ' को मात्रा छ अर्थात् مجتهدين في أيمانهم । अर्थ यो हो कि आफ्नो पूरा शक्ति लगाइ सौगन्ध (कसम) खाएर भन्दछन् । (फ़तहुल क़दीर)

[2]तथा त्यो यो हो कि जसरी तिमी झूठो कसम खान्छौ तिम्रो आज्ञापालन पनि द्वयवादीतामा आधारित छ । केही विद्वानहरुले यो अर्थ निकालेका छन् कि तिम्रो कुरो त आज्ञापालन हुनुपर्छ । अर्थात् सत्कर्ममा कुनै प्रकारको सौगन्ध बिना आज्ञाकारिता जुनप्रकारले मुसलमान गर्दछन्, अत: तिमी पनि उनका समान भईहाल । (इब्ने कसीर)

[3]अर्थात् त्यो तिमी सबैका स्थितिहरुसित परिचित छ । को आज्ञाकारी छ तथा को अवज्ञाकारी ? अत: सौगन्ध खाएर आज्ञाकारिताको प्रदर्शन गर्नबाट, जबकि तिम्रो हृदयमा उसका विरुद्ध लक्ष्य छ, तिमी अल्लाहलाई धोका दिन सक्दैनौ । यसकारण कि त्यो गुप्तभन्दा गुप्त कुरोलाई पनि जान्दछ तथा त्यो तिम्रा हृदयमा भयका गुप्त कुराहरुसित पनि परिचित छ, चाहे तिमी आफ्नो मुखले त्यसको विरुद्ध प्रदर्शन गर ।

[4]अर्थात् आदेश पुर्याउने तथा धर्मको आमन्त्रणको कर्तव्य जुन त्यो पूरा गरिराखेको छ ।

राखिएको छ,[1] मार्गदर्शन त तिमीलाई त्यसै बेला प्राप्त हुनेछ जब रसूलको आधीनता स्वीकार गर्नेछौ,[2] (सुन,) रसूलको कर्तव्य स्पष्टरुपले (संदेश) पुऱ्याइदिनु हो ।[3]

(५५) तिमीहरुमध्ये जसले ईमान स्थापित गरेका छन् तथा पुण्यका कार्य गरेका छन्, अल्लाह (तआला) ले वचन दिसकेको छ कि उनीहरुलाई राज्य (धर्ती) को अधिकारी बनाउनेछ, जस्तो कि तिनीहरुलाई अधिकारी बनाएको थियो, जो उनीभन्दा पूर्व थिए तथा निःसन्देह उनका निम्ति उनका यस धर्मलाई सुदृढताका साथ स्थापित गरिदिने छ जसलाई उनका लागि त्यसले रुचाई सकेको छ तथा उनका यस भय एवं त्रासलाई शान्ति र चैनमा परिवर्तित गरिदिने छ,[4] उनीहरु मेरो

وَعَدَ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا مِنْكُمْ وَعَمِلُوا الصّٰلِحٰتِ لَيَسْتَخْلِفَنَّهُمْ فِي الْاَرْضِ كَمَا اسْتَخْلَفَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۠ وَلَيُمَكِّنَنَّ لَهُمْ دِيْنَهُمُ الَّذِي ارْتَضٰى لَهُمْ وَلَيُبَدِّلَنَّهُمْ مِّنْۢ بَعْدِ خَوْفِهِمْ اَمْنًا ۭ يَعْبُدُوْنَنِيْ لَا يُشْرِكُوْنَ بِيْ شَيْـًٔا ۭ وَمَنْ كَفَرَ

---

[1]अर्थात् त्यसको आमन्त्रणलाई स्वीकार गरी अल्लाह तथा त्यसका रसूलमा ईमान स्थापित गर्नु तथा त्यसको पालना गर्नु ।

[2]यसकारण कि त्यो सोझो बाटोतिर आमन्त्रण गर्दछ ।

[3]कसैले उसका आमन्त्रण स्वीकार गरोस् अथवा न गरोस्, जस्तो कि अन्य ठाउँमा आदेश गऱ्यो,

﴿ فَإِنَّمَا عَلَيْكَ الْبَلٰغُ وَعَلَيْنَا الْحِسَابُ ﴾

"हे पैगम्बर ! तिम्रो कार्य केवल (हाम्रा संदेश) पुऱ्याइदिनु हो (कसैले स्वीकार गरोस् अथवा न गरोस्) यो हिसाब हाम्रो काम हो ।" (सूरः अल-रअद-४०)

[4]केही विद्वानहरुले यस अल्लाहको वचनलाई सहाबा करामसित अथवा खुलफ़ाये राशदीनसँग विशेषरुपले सम्बन्धित गरेका छन्, परन्तु यसको यस विशेषताको कुनै प्रमाण छैन । कुरआनका शब्द सामान्य छन् तथा ईमान तथा पुण्य कार्यसित प्रतिबन्धित छन् । परन्तु यो कुरा अवश्य छ कि ख़िलाफते राशिदाको कालमा तथा पुण्य कालमा, यो अल्लाहको वचन प्रकट भयो, अल्लाहले मुसलमानहरुलाई धर्तीमा प्रभावशाली बनायो, आफ्नो प्रिय धर्म इस्लामलाई उन्नति प्रदान गऱ्यो तथा मुसलमानका भयलाई शान्तिमा परिवर्तित गरिदियो । पहिला मुसलमान अरबका काफ़िरहरुसित भयभीत हुने गर्दथे, पछि कुरा त्यसको विपरीत भयो । नबी सल्लल्लाहु अलैहि वसल्लमले जुन भविष्यवाणी गर्नुभएको थियो,

بَعْدَ ذَٰلِكَ فَأُولَٰٓئِكَ هُمُ الْفَٰسِقُونَ ﴿٥٥﴾

इबादत (उपासना) गर्नेछन्, मसँग कसैलाई सम्मिलित गर्ने छैनन् ।[1] त्यस पश्चात पनि जो कृतघ्नता गर्दछन् तथा कुफ़्र गर्दछन् त उनी निःसन्देह अवज्ञाकारी हुन् ।[2]

وَأَقِيمُوا الصَّلَوٰةَ وَءَاتُوا الزَّكَوٰةَ

(५६) तथा नमाज़ स्थापित गर, ज़कात तिर्ने गर तथा अल्लाहका रसूलका

ती पनि यसै कालमा पूरा भए । जस्तो कि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएको थियो कि हिरः (यमनमा एउटा स्थान) नामक स्थानबाट एउटी स्त्री एक्लै हिंड्ने छ तथा बैतुल्लाह आइपुगि परिक्रमा गर्नेछ, त्यसलाई कुनै भय अथवा खतरा हुनेछैन । किसराको कोष तिम्रो चरणमा आइपुग्नेछ । अतः यस्तै भयो । (सहीह बुख़ारी किताबुल मनाक़िब बाबु अलामाति नबुअते फ़िल इस्लाम) नबी सल्लल्लाहु अलैहि वसल्लमले यो पनि भन्नुभयो :

«إِنَّ اللَّهَ زَوَى لِيَ الأَرْضَ، فَرَأَيْتُ مَشَارِقَهَا وَمَغَارِبَهَا، وَإِنَّ أُمَّتِي سَيَبْلُغُ مُلْكُهَا مَا زُوِيَ لِي مِنْهَا»

"अल्लाह तआलाले धर्तीलाई मेरो लागि संकुचित गरिदिनु भयो, अन्ततः मैले त्यसका पूर्वी तथा पश्चिमी क्षेत्र देखें, निकटमै मेरा अनुयायीको प्रभाव-क्षेत्र यहाँसम्म पुग्ने छ, जहाँसम्म धर्ती मेरो लागि संकुचित गरियो ।" (सहीह मुस्लिम किताबुल फ़ेतन व अशरातिस्सआते बाब हलाके हाज़िहिल उम्मते बआज़हुम बिबाअज़िन)

राज्यको यो विशालता पनि मुसलमानहरुको भाग्यमा आयो तथा इरान, सीरिया, मिश्र, अफ़्रिका तथा अन्य दूरस्थ देश विभाजित भए तथा मूर्तिपूजाको स्थानमा एकेश्वरवाद तथा सुन्नतका दीप प्रकाशित भए । तथा इस्लामी संस्कृतिको झण्डा संसारको कुना-काप्चामा फहराउन थाल्यो । परन्तु यो वचन प्रतिबन्धित थियो, जब मुसलमान ईमानमा क्षीण तथा पुण्यका कार्य गर्नमा आलस्य गर्नथाले, तब अल्लाहले उनका सम्मानलाई अपमानमा, उनका विजयलाई पराजय तथा उनका प्रभुत्वलाई दासतामा तथा उनका शान्ति तथा स्थिरतालाई भय तथा आतङ्कमा परिवर्तित गरिदियो ।

[1]यो पनि ईमान तथा पुण्य कर्म गर्नुका साथ एक अन्य आधारभूत अनुबन्ध हो जसले गर्दा मुसलमान अल्लाहको सहायताको अधिकारी तथा एकेश्वरको गुणबाट शून्य भए पश्चात उनी अल्लाहको सहायताबाट बञ्चित हुनेछन् ।

[2]यस कुफ़्रसित तात्पर्य त्यही ईमान, पुण्यका कर्म तथा एकेश्वरवादबाट बञ्चित हुनु हो, जस पश्चात मनुष्य अल्लाहको आज्ञाकारिताबाट निस्कन्छ तथा कुफ़्र एवं भ्रष्टाचारमा प्रवेश गर्दछ ।

وَأَطِيعُوا الرَّسُولَ لَعَلَّكُمْ تُرْحَمُونَ ﴿٥٦﴾

अनुसरणमा लागिराख ताकि तिमीमाथि दया गरियोस् ।[1]

لَا تَحْسَبَنَّ الَّذِينَ كَفَرُوا مُعْجِزِينَ فِي الْأَرْضِ ۚ وَمَأْوَاهُمُ النَّارُ ۖ وَلَبِئْسَ الْمَصِيرُ ﴿٥٧﴾

(५७) यो विचार तपाईं कहिल्यै नगर्नु कि अवज्ञाकारीहरु धर्तीमा (यता-उता फैलिएर) हामीलाई पराजित गर्नसक्ने छन्[2] तिनीहरुको मूल वासस्थान नरक हो, जुन निःसन्देह साह्रै नराम्रो बस्ने ठाउँ हो ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لِيَسْتَأْذِنْكُمُ الَّذِينَ مَلَكَتْ أَيْمَانُكُمْ وَالَّذِينَ لَمْ يَبْلُغُوا الْحُلُمَ مِنْكُمْ ثَلَاثَ مَرَّاتٍ ۚ مِنْ قَبْلِ صَلَاةِ الْفَجْرِ وَحِينَ تَضَعُونَ ثِيَابَكُمْ مِنَ الظَّهِيرَةِ وَمِنْ بَعْدِ صَلَاةِ الْعِشَاءِ ۚ ثَلَاثُ عَوْرَاتٍ لَكُمْ ۚ

(५८) हे निष्ठावानहरु ! तिमीसित, तिम्रो स्वामित्वमा रहेका दासहरुलाई तथा उनीहरुलाई जो तिमीमध्ये वयस्क अवस्थालाई पुगेका छैनन् (आफ्ना आगमनबारे) तीन समयमा आज्ञा प्राप्त गर्नु आवश्यक छ । फज्रको नमाज़ पूर्व तथा ज़ोहर (मध्यान्ह) को समयमा जब तिमी आफ्ना वस्त्र फेरेका हुन्छौ तथा एशा (रात्रि) को नमाज़ पश्चात,[3] यी तीनवटै समय तिम्रा एकान्त एवं पर्दाका हुन् ।

[1]यो जस्तो कि मुसलमानहरुलाई बल दिएर भनियो कि अल्लाहको कृपा तथा सहायता प्राप्त गर्ने साधन यही हो जसलाई अपनाएर सहाबा करामलाई यो कृपा तथा सहायता प्राप्त भयो ।

[2]अर्थात् तपाईं सल्लल्लाहु अलैहि वसल्लमका विरोधी तथा झुठा व्यक्तिहरु अल्लाहलाई बाध्य गर्न सक्दैनन्, बरु अल्लाह तआला उनीहरुको पकड गर्न सामर्थ्य राख्दछ ।

[3]दासहरुसित तात्पर्य दास-दासीहरु दुवै हुन् । ثلاث مرات का अर्थ तीन समय हुन् । यी तीन समय यस्ता हुन् कि मनुष्य आफ्नो पत्नीसँग घरमा विशेषरुपले बस्छ अथवा यस्तो वस्त्रमा हुनसक्दछ जसमा कुनै अन्यलाई देख्नु उचित छैन । यसकारण यी तीन अवस्थामा घरका सेवकहरुलाई यस कुराको आज्ञा छैन कि उनी आज्ञा प्राप्त नगरी घरमा प्रवेश गरुन् ।

[4] عورات बहुवचन हो عورة को, जसको वास्तविक अर्थ विघ्न तथा दोष हो । पछि यसको प्रयोग यस्तो कुरामा गर्न थालियो जसलाई प्रदर्शित गर्न तथा देख्न प्रिय नहोस् । स्त्रीलाई पनि यसैकारण 'औरत' भनिन्छ कि त्यसको प्रदर्शन तथा नग्न हुनु तथा देख्नु धार्मिक नियमानुसार अप्रिय छ । यहाँ वर्णित तीन समयलाई औरत भनिएको छ ।

لَيْسَ عَلَيْكُمْ وَلَا عَلَيْهِمْ جُنَاحٌ بَعْدَهُنَّ ۚ طَوَّافُونَ عَلَيْكُم بَعْضُكُمْ عَلَىٰ بَعْضٍ ۚ كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ لَكُمُ الْآيَاتِ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٥٨﴾

यी समयका अतिरिक्त न त तिमीलाई पाप छ न त उनीहरुलाई ।[1] तिमी सबै एक आपसतिर आउने-जाने गर्ने हौ (नै,)[2] अल्लाह यसरी खुलस्त रुपले आफ्ना आदेश तिमीसित वर्णन गरिराखेको छ । र अल्लाह (तआ़ला) ज्ञानी तथा गुणज्ञ छ ।

وَإِذَا بَلَغَ الْأَطْفَالُ مِنكُمُ الْحُلُمَ فَلْيَسْتَأْذِنُوا كَمَا اسْتَأْذَنَ الَّذِينَ مِن قَبْلِهِمْ ۚ كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ لَكُمْ آيَاتِهِ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٥٩﴾

(५९) तथा तिमी मध्ये जुन बच्चाहरु वयस्क अवस्थामा पुग्दछन्, त जुन प्रकारले पूर्वका (ठूला) मानिसहरु आज्ञा माँग्दछन्, उनीहरुले पनि आज्ञा माँगेर आउनु पर्छ ।[3] अल्लाह (तआ़ला) तिमीसित यसैप्रकार आफ्ना आयतको वर्णन गर्दछ । अल्लाह (तआ़ला) नै ज्ञानी तथा मर्मज्ञ छ ।

अर्थात् यी तिम्रा पर्दा तथा एकान्तको समय हुन्, जसमा तिमी आफ्ना विशेष वस्त्र तथा शारीरिक प्रदर्शनलाई प्रिय ठान्दैनौ ।

[1] अर्थात् यी वर्णित तीन समयका अतिरिक्त घरका सेवकहरुलाई आज्ञा छ कि उनी आज्ञा प्राप्त नगरिकन घरभित्र आवत-जावत गर्न सक्दछन् ।

[2] यो त्यही कारण हो जुन हदीसमा विरालो पवित्र हुने कुरो भनिएको छ । «إِنَّهَا لَيْسَتْ بِنَجَسٍ؛ إِنَّهَا مِنَ الطَّوَّافِينَ عَلَيْكُمْ - أَوِ الطَّوَّافَاتِ -» "बिरालो अपवित्र छैन यसकारण कि त्यो अधिकतर तिम्रो निकट (घरभित्र) आवत-जावत गर्नेछ ।" (अबू दाऊद किताबुत तहारत बाब सूरूल हिर्र: र तिर्मिजी किताब व बाब मजूकर वगैरह) सेवक तथा स्वामीलाई पनि समय-समयमा भेट्ने आवश्यकता रहन्छ, यसै सामान्य आवश्यकताको कारण अल्लाह (तआ़ला) ले यो आज्ञा प्रदान गऱ्यो, किनकी त्यो सबै कुरा जान्दछ, मानिसका आवश्यकता तथा कष्टहरुलाई जान्दछ तथा गुणज्ञ छ, त्यसका प्रत्येक आदेशमा भक्तहरुका लागि लाभ तथा हित छ ।

[3] यी बालकहरुसित तात्पर्य स्वतन्त्र बालक हुन्, वयस्कता पश्चात आज्ञा लिनुमा उनी साधारण पुरुषहरु जस्तै हुन्, यसकारण उनका निम्ति आवश्यक छ कि जहिले पनि कसैको घरमा प्रवेश गर्दछन् भने प्रथम आज्ञा प्राप्त गरुन् ।

(६०) तथा बृद्धा स्त्रीहरु जसलाई विवाहको आशा (तथा इच्छा) नै नरहेको होस्, तिनीहरु यदि आफ्ना वस्त्र (पर्दाका लागि गरिएका) झिकेर राखिदिन्छन् भने तिनीहरुलाई कुनै दोष छैन, जबकि उनीहरु शोभा प्रदर्शन गर्नेहरु नहोऊन्।[1] तैपनि यसबाट पन्छिन्छन् भने तिनीहरुका निम्ति धेरै राम्रो छ।[2] र अल्लाह (तआला) सुन्दछ तथा जान्दछ।

وَالْقَوَاعِدُ مِنَ النِّسَاءِ الّٰتِيْ لَا يَرْجُوْنَ نِكَاحًا فَلَيْسَ عَلَيْهِنَّ جُنَاحٌ اَنْ يَّضَعْنَ ثِيَابَهُنَّ غَيْرَ مُتَبَرِّجٰتٍۭ بِزِيْنَةٍ ۭ وَاَنْ يَّسْتَعْفِفْنَ خَيْرٌ لَّهُنَّ ۭ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ۝

(६१) अन्धालाई, लंगडालाई, रोगीलाई तथा स्वयं तिमीलाई कदापि कुनै विघ्न (आपत्ति) छैन कि तिमी आफ्ना घरहरुबाट खाउ, अथवा आफ्ना पिताका घरहरुबाट अथवा आफ्ना माताहरुका घरबाट, अथवा आफ्ना दाज्यू-भाईहरुका घरबाट, अथवा आफ्ना दिदी-बहिनीहरुको घरबाट, अथवा आफ्ना काकाहरुका घरबाट,[3] अथवा आफ्ना फूपुहरुका घरबाट,

لَيْسَ عَلَى الْاَعْمٰى حَرَجٌ وَّلَا عَلَى الْاَعْرَجِ حَرَجٌ وَّلَا عَلَى الْمَرِيْضِ حَرَجٌ وَّلَا عَلٰٓى اَنْفُسِكُمْ اَنْ تَاْكُلُوْا مِنْۢ بُيُوْتِكُمْ اَوْ بُيُوْتِ اٰبَاۗىِٕكُمْ اَوْ بُيُوْتِ اُمَّهٰتِكُمْ

[1]यिनीबाट तात्पर्य वृद्धा तथा बाँझो स्त्री हुन् जसका मासिक धर्म आउन बन्द भईसकेको छ तथा सन्तानोत्पत्तिका योग्य रहेका हुँदैनन्। यस आयुमा साधारणतः स्त्रीमा पुरुषतिरको काम भावनाको प्राकृतिक इच्छा समाप्त भईसकेको हुन्छ, न त उनीहरु कुनै पुरुषसित विवाहको इच्छा राख्दछन् तथा न कुनै पुरुष यस भावनाबाट उनीतिर आकृष्ट हुन्छ। यस्ता स्त्रीहरुलाई पर्दामा कमी गर्न आज्ञा दिइएको छ। "वस्त्र उतारेर राखून्" बाट त्यो वस्त्र अभिप्राय हो जुन शलवार कमीजमाथि स्त्री पर्दाका लागि ठूलो शाल अथवा नकाब आदिको रुपमा प्रयोग गर्दछन्, यदि उनीहरुको उद्देश्य आफ्ना सौन्दर्य प्रसाधन तथा आभूषणहरुको प्रदर्शन नहोस्। यसको अर्थ यो हो कि कुनै पनि स्त्री आफ्नो कामभावना समाप्त भए उपरान्त यदि सिंगार-पटारद्वारा आफ्नो कामभावना प्रदर्शित गर्ने रोगी छ भने त्यो पर्दाको कमीको आदेशबाट बञ्चित छ तथा त्यसको लागि पूर्ण पर्दा गर्नु आवश्क छ।

[2]अर्थात् वर्णित बृद्धा स्त्रीहरु पनि पर्दामा कमी नगरुन्, बरु नियमित रुपले ठूलो च्यादर (साल) अथवा नकाब पनि प्रयोग गरिराखून्, त यो उनीहरुका निम्ति श्रेष्ठ छ।

[3]यसको एउटा अर्थ यो वर्णित गरिएको छ कि धर्मयुद्धमा जाँदाखेरि सहाबा किराम आयतमा वर्णित असहायहरुलाई आफ्ना घरहरुका साँचा दिएर जाने गर्दथे तथा उनीहरुलाई घरका

أَوْ بُيُوتِ إِخْوَانِكُمْ أَوْ بُيُوتِ أَخَوَاتِكُمْ أَوْ بُيُوتِ أَعْمَامِكُمْ أَوْ بُيُوتِ عَمَّاتِكُمْ أَوْ بُيُوتِ أَخْوَالِكُمْ أَوْ بُيُوتِ خَالَاتِكُمْ أَوْ مَا مَلَكْتُم مَّفَاتِحَهُ أَوْ صَدِيقِكُمْ ۚ لَيْسَ عَلَيْكُمْ جُنَاحٌ أَن تَأْكُلُوا

अथवा आफ्ना मामाहरुका घरबाट अथवा आफ्ना मौसीहरु (आमाका दिदी-बहिनीका) घरबाट अथवा ती घरहरुबाट जसका साँचोका स्वामी तिमी हौ अथवा आफ्ना मित्रहरुका[1] घरबाट। तिमीलाई यस कुरोमा पनि कुनै पाप छैन कि तिमी सँगै बसेर खाना खाउ अथवा अलग-अलग।[2] तर जब तिमी

सामाग्री खान-पिउनका निम्ति आज्ञा दिएर जान्थे। परन्तु यी असहाय सहावा यसका उपरान्त स्वामीहरुका अनुपस्थितिमा त्यहाँबाट खान-पिउन उचित ठान्दैनथे, अल्लाहले आदेश गर्‍यो कि उपरोक्त मानिसहरुका लागि आफ्ना नजिकका सम्बन्धिहरुका घरहरुबाट अथवा जुन घरहरुका साँचो उनीसित छन्, तिनीबाट खान-पिउनमा कुनै बाधा (पाप) छैन। तथा केही विद्वानहरुले यसको अर्थ यो वर्णन गरेका छन् कि स्वस्थ सहावा, लाचार (असहाय) सहाबासँग यसकारण खान प्रिय ठान्दैनथे कि उनीहरु लाचारीका कारण कम खानेछन् तथा यिनीहरु अधिक खानेछन्, यसकारण खानुमा उनीसित अत्याचार नहोस्। यसैप्रकार स्वयं लाचार सहावा पनि स्वस्थ सहावासँग भोजन गर्न प्रिय ठान्दैनथे कि मानिसहरु उनीसँग भोजन गर्नुमा घृणाको आभास नगरुन्। अल्लाह तआलाले दुबैका लागि स्पष्टीकरण गरिदियो कि यसमा कुनै पापको कुरो छैन।

[1]जस्तो कि केही आलिमहरुले (धर्मज्ञहरु) स्पष्ट रुपले वर्णन गरेका छन् कि यसबाट जो सामान्य प्रकारको भोजन तात्पर्य छ जसलाई खानुबाट कसैलाई बोझको आभास हुँदैनथ्यो। परन्तु यस्ता स्वादिष्ट कुरा जुन स्वामीहरुले विशेषरुपले लुकाएर राखेका हुन्छन्, ताकि त्यसमाथि दृष्टि नपरोस्, यसैप्रकार भण्डारका कैयन् वस्तुहरु, यिनलाई खानु तथा यिनलाई प्रयोगमा ल्याउनु उचित छैन। (ऐसरुत्तफासीर) यसैप्रकार यहाँ पुत्रहरुका घरहरुको वर्णन गरिएन, यसको कारण यो हो कि पुत्रहरुका घर त्यस व्यक्तिको आफ्नै घर हो, जस्तो कि हदीसमा «أَنْتَ وَمَالُكَ لِأَبِيكَ» (इब्ने माजा संख्या २२९१, मुसनद अहमद भाग २, पृष्ठ १७९, २०४ तथा २१४) "तिमी तथा तिम्रो धन तिम्रो पिताको हो।" अन्य हदीसमा छ। ولد الرجل من كسبه (इब्ने माजा संख्या २१३७, अबू दाऊद संख्या ३५२८ तथा अलवानीले यसलाई ठिक भन्नुभएको छ) "मनुष्यको सन्तान, उसको कमाईमध्ये हो।"

[2]यसमा एउटा अन्य संकीर्णताको निवारण गरिएको छ। केही मानिसहरु एक्लै भोजन गर्न प्रिय ठान्दैनथे तथा कसैलाई सँगै बसालेर भोजन गर्न आवश्यक ठान्दथे। अल्लाह तआलाले आदेश गर्‍यो, एकत्रित भई खाउ अथवा अलग-अलग दुबै प्रकारले मान्य छ, पाप कुनैमा छैन। परन्तु एकत्रित भई खानु अधिक शुभको कारण हो, जस्तो कि केही हदीसहरुबाट विदित हुन्छ। (इब्ने कसीर)

جَمِيْعًا اَوْ اَشْتَاتًا ؕ فَاِذَا دَخَلْتُمْ بُيُوْتًا فَسَلِّمُوْا عَلٰٓى اَنْفُسِكُمْ تَحِيَّةً مِّنْ عِنْدِ اللّٰهِ مُبٰرَكَةً طَيِّبَةً ؕ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمُ الْاٰيٰتِ لَعَلَّكُمْ تَعْقِلُوْنَ ﴿٦١﴾

घरहरुमा जान थाल्छौ त आफ्ना घरका सबैलाई सलाम गर्ने गर,[1] शुभकामना छ जुन मंगलमय तथा पवित्र अल्लाहका तर्फबाट अवतरित छ, यसैप्रकार अल्लाह तआला प्रष्टरुपले आफ्ना आदेशहरुको वर्णन गरिराखेको छ ताकि तिमी बुझ्न सक ।

اِنَّمَا الْمُؤْمِنُوْنَ الَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ وَاِذَا كَانُوْا مَعَهٗ عَلٰٓى اَمْرٍ جَامِعٍ لَّمْ يَذْهَبُوْا حَتّٰى يَسْتَاْذِنُوْهُ ؕ اِنَّ الَّذِيْنَ يَسْتَاْذِنُوْنَكَ اُولٰٓئِكَ الَّذِيْنَ يُؤْمِنُوْنَ بِاللّٰهِ وَرَسُوْلِهٖ ۚ فَاِذَا اسْتَاْذَنُوْكَ لِبَعْضِ شَاْنِهِمْ فَاْذَنْ لِّمَنْ شِئْتَ مِنْهُمْ وَاسْتَغْفِرْ لَهُمُ اللّٰهَ ؕ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٦٢﴾

(६२) निष्ठावान्हरु त ती नै हुन् जो अल्लाह तआलामा तथा त्यसका रसूलमा विश्वास गर्दछन् तथा जब यस्तो समस्यामा जसमा मानिसहरु एकत्रित हुने कुरोको आवश्यकता नबीसँग हुन्छन्, त जबसम्म तपाईंसित आज्ञा प्राप्त गर्दैन कतै अन्यत्र जाँदैन । जुन व्यक्तिहरु (यस्ता अवसरमा) तपाईंसित आज्ञा लिन्छन्, वास्तवमा ती यी नै हुन् जो अल्लाह (तआलामा) तथा त्यसका रसूलमा ईमान स्थापित गरिसकेका छन् ।[2] त यस्ता व्यक्ति जब तपाईंसित आफ्ना कुनै कार्यका लागि आज्ञा माँगदछन् भने तपाईं उनीहरुमध्ये जसलाई चाहनु हुन्छ, आज्ञा दिनुस् तथा उनका लागि अल्लाहसित मोक्षको

[1]यसमा आफ्ना घरहरुमा प्रवेश गर्ने शिष्टाचारको वर्णन छ तथा त्यो यो हो कि प्रवेश गर्दाखेरि घरका मानिसहरुलाई सलाम (अविवादन) गर, मनुष्यको लागि आफ्नी पत्नी तथा सन्तानलाई सलाम गर्नुमा सामान्यतया कठिनाई प्रतीत हुन्छ । परन्तु ईमान भएका लागि आवश्यक छ कि उनी अल्लाहको आदेश अनुसार यस्तो गरुन् । आफ्नी पत्नी तथा सन्तानलाई सुरक्षाको दुआबाट किन बञ्चित राख्नु ।

[2]अर्थात् शुक्रवार अथवा ईदहरु (ईदुल फित्र तथा ईदुल अज़हा) का सम्मेलनमा अथवा आन्तरिक तथा वाह्य समस्यामाथि विचार गर्नका निम्ति आमन्त्रित सभामा निष्ठावान् त उपस्थित हुन्छन्, यसैप्रकार यदि उनी सम्मिलित हुन योग्य हुँदैनन् भने आज्ञा प्राप्त गर्दछन् । यसको अर्थ अर्को शब्दमा यो भयो कि द्वयवादी यस्ता सम्मेलनमा सम्मिलित हुनबाट तथा तपाईं सल्लल्लाहु अलैहि वसल्लमसित अनुमति लिनबाट पन्छिन्छन् ।

प्रार्थना गर्नुस्, निःसन्देह अल्लाह (तआ़ला) क्षमाशील कृपालु छन् ।

(६३) तिमी (अल्लाहका) नबीका निमन्त्रणालाई यस्तो साधारण निमन्त्रण नठान जस्तो आपसमा एक-अर्कासित हुन्छ ।[1] तिमीमध्ये तिनलाई अल्लाह राम्ररी जान्दछ जो वास्ता नगरी थाहै नदिइकन गइहाल्छ ।[2] (सुन) जुन व्यक्तिहरु रसूलका आदेशको विरोध गर्दछन् उनीहरु तर्सिराख्नुपर्छ कि कहीं उनीमाथि कुनै अत्यन्त घोर दुर्घटना नआईपरोस्[3] अथवा उनीहरुलाई कुनै दुखको मार नपरोस् ।

لَا تَجْعَلُوا دُعَاءَ الرَّسُولِ بَيْنَكُمْ كَدُعَاءِ بَعْضِكُم بَعْضًا ۚ قَدْ يَعْلَمُ اللَّهُ الَّذِينَ يَتَسَلَّلُونَ مِنكُمْ لِوَاذًا ۚ فَلْيَحْذَرِ الَّذِينَ يُخَالِفُونَ عَنْ أَمْرِهِ أَن تُصِيبَهُمْ فِتْنَةٌ أَوْ يُصِيبَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٦٣﴾

[1]यसको एउटा अर्थ यो हो कि जसरी तिमी एक-अर्कालाई पुकारदछौ, रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई त्यसरी नपुकार । जस्तै हे मुहम्मद ! (सल्लल्लाहु अलैहि वसल्लम) होइन बरु हे रसूलल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) हे नबी ! अल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) आदि भन (यो तपाईं सल्लल्लाहु अलैहि वसल्लमका जीवनकालको लागि थियो, जब सहाबा किरामलाई आवश्यकता हुन्थ्यो कि तपाईं सल्लल्लाहु अलैहि वसल्लमको ध्यान आकर्षित गरून्) । तर नबी सल्लल्लाहु अलैहि वसल्लमको देहान्तपछि अब उहाँलाई "या रसूलुल्लाह" (हे अल्लाहका सन्देष्टा) वा "या नबीयल्लाह" (हे अल्लाहका सन्देशवाहक) जस्ता शब्दहरु प्रयोग गरि पुकार्नु प्रमाणित छैन, किनकि मानिसले यदि यसप्रकारका वाक्य भन्नुका साथ-साथै उहाँसित केही माग्ने आस्था राख्छ वा उहाँलाई कष्ट निवारणका लागि पुकार्छ भने त्यसको गणना शिर्कमा हुन्छ । यसर्थ अल्लाहको हक-अधिकारमा अरु कसैलाई समावेश गर्नबाट स्वयं बाँच्नु र अरुहरुलाई पनि बचाउनु हाम्रो प्रथम दायित्व हो । अन्य अर्थ यो हो कि रसूलका शापलाई अन्यका शाप जस्तै नठान, यसकारण कि तपाईं सल्लल्लाहु अलैहि वसल्लमको दुआ़ स्वीकार हुन्छन् । यसकारण नबीका शाप नलिउ, तिमी नाश हुनेछौ ।

[2]यो द्वयवादीहरुको व्यवहार हुन्थ्यो कि विचार समितिबाट थाहै नदिइकन सुटुक्क जान्थे ।

[3]यस आपदासित तात्पर्य हृदयहरुको त्यो टेढोपन हो, जुन मनुष्यलाई ईमानबाट बञ्चित गर्दछन् । यो नबी सल्लल्लाहु अलैहि वसल्लमका आदेशहरुको अवहेलना तथा उनको विरोधको परिणाम हो । तथा ईमानबाट बञ्चित भई कुफ्रमा अन्त्य, नरकको स्थाई यातनाको कारण बन्दछ, जस्तो कि आयतको अघिल्लो वाक्यमा आदेश गर्‍यो । अतः नबी सल्लल्लाहु अलैहि वसल्लमका आचरण तथा सुन्नत (चरित्र) लाई प्रत्येक समय अगाडी राख्नुपर्छ । यसकारण जुन कथनी तथा करनी त्यस अनुसार हुनेछ त्यही अल्लाहको दरबारमा स्वीकार तथा शेष सबै अस्वीकार हुन्छ । तपाईं सल्लल्लाहु अलैहि वसल्लमको कथन छ «مَنْ عَمِلَ عَمَلًا لَيْسَ عَلَيْهِ أَمْرُنَا، فَهُوَ رَدٌّ» "जसले यस्तो कार्य गर्‍यो जुन हाम्रा आदेश अनुरुप छैनन्, त्यो रद्द छ ।" (अल-बुख़ारी किताबुस्सुलह बाँब इज़ा स्तलहू अला सुलहे जौरिन तथा मुस्लिम किताबुल अकज़िया बाब नक़्जिल अहकामिल बातिल: व रद्दि मुहदसातिल उमूर वस्सुनन)

اَلَآ اِنَّ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَالْاَرْضِ ؕ قَدْ يَعْلَمُ مَآ اَنْتُمْ عَلَيْهِ ؕ وَيَوْمَ يُرْجَعُوْنَ اِلَيْهِ فَيُنَبِّئُهُمْ بِمَا عَمِلُوْا ؕ وَاللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿٦٤﴾

(६४) सतर्क भइहाल कि आकाश तथा धर्तीमा जे-जति छ सबै अल्लाह (तआ़ला) कै हो,[1] जुन मार्गमा तिमीहरु हिंडिराखेका छौ, त्यो त्यससित राम्ररी अवगत छ[2] तथा जुन दिन यी सबै उसैतिर फर्काइनेछन्, त्यसदिन उनीहरुलाई उनीबाट गरिएका कुरासित अवगत गराइदिने छ । तथा अल्लाह (तआ़ला) सबै कुरा जान्दछ ।

## سُوْرَةُ الْفُرْقَانِ

## सूरतुल फ़ुरक़ान-२५

सूर: फ़ुरक़ान मक्कामा अवतरित भएको हो तथा यसमा सतहत्तर आयतहरु तथा छ: रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाह बडो दयावान अति करुणामयीको नामबाट प्रारम्भ गर्दछु ।

تَبٰرَكَ الَّذِيْ نَزَّلَ الْفُرْقَانَ عَلٰى

(१) अत्यन्त शुभ छ त्यो (अल्लाह तआ़ला) जसले आफ्नो भक्तमाथि फ़ुरक़ान[3] अवतरित गऱ्यो

[1]उत्पत्तिको आधारमा पनि, स्वामित्वको आधारमा पनि, तथा अधीनताको आधारमा पनि । त्यसले जसरी चाहन्छ प्रयोगमा ल्याउँछ तथा जुन वस्तुलाई चाहेमा आदेश दिन्छ । अत: त्यसका रसूल सल्लल्लाहु अलैहि वसल्लमका मामिलामा अल्लाहसित तर्सिराख्नुपर्छ, जसको माँग यो हो कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको कुनै पनि उपदेशको अवहेलना गर्न हुँदैन तथा जुन कुराबाट उसले मनाही गरेको छ, त्यसलाई गर्नुहुन्न । यसकारण कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई अवतरण गरिनुको उद्देश्य नै यो हो कि त्यसको आज्ञापालन गरियोस् ।

[2]यो रसूल सल्लल्लाहु अलैहि वसल्लमका विरोधीहरुलाई चेतावनी हो कि जे-जति तिमी गरिराखेका छौ, यो नठान कि त्यो अल्लाहबाट लुकेर रहन सक्दछ । त्यसको ज्ञानमा सबै कुरा छ तथा त्यसले त्यस अनुसार केयामतका दिन प्रतिफल तथा दण्ड दिनेछ ।

[3]फ़ुरकानको अर्थ हो सत्य तथा असत्य, एकेश्वरवाद-अनेकेश्वरवाद एवं न्याय-अन्यायबीच अन्तर गर्नेवाला, यस क़ुरआ़नले यी कुरालाई छर्लङ्ग पारिदिएको छ, यसैकारण यसलाई खुल्ला रुपले फ़ुरक़ान भनिएको छ ।

عَبْدِهٖ لِيَكُوْنَ لِلْعٰلَمِيْنَ نَذِيْرًا ۙ①

ताकि त्यो सबै मानिसहरुका लागि[1] सतर्क गर्ने बन्न सकोस् ।

الَّذِيْ لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ وَلَمْ يَتَّخِذْ وَلَدًا وَّلَمْ يَكُنْ لَّهٗ شَرِيْكٌ فِي الْمُلْكِ وَخَلَقَ كُلَّ شَيْءٍ

(२) त्यसै अल्लाहको आधिपत्य छ आकाशहरु तथा धर्तीमाथि,[2] तथा उसले न त कसैलाई आफ्नो सन्तान बनाएको छ[3] र न राज्यमा उसको कोही साझीदार (अंशियार) छ,[4] तथा प्रत्येक वस्तुलाई उसले सृष्टि गरेर एउटा

---

[1]यसबाट पनि विदित भयो कि नबी सल्लल्लाहु अलैहि वसल्लमको नबूअत विश्वव्यापी छ तथा तपाईं सल्लल्लाहु अलैहि वसल्लम सबै मानव तथा दानवका लागि पथप्रदर्शक तथा मार्गदर्शक बनाएर पठाइए जसरी अन्य स्थानमा आदेश गर्‍यो :

﴿ قُلْ يٰٓاَيُّهَا النَّاسُ اِنِّيْ رَسُوْلُ اللّٰهِ اِلَيْكُمْ جَمِيْعًا ﴾

"तपाईं भनिदिनुस् कि हे मानिसहरु ! म तिमी सबैतिर अल्लाहको सन्देशवाहक हुँ ।" (सूर: अल-आराफ़-१५८)

र एउटा हदीसमा पनि आदेश छ :

بُعِثْتُ إلى الأحمر و الأسود

"मलाई रातो वर्ण तथा कालो वर्ण सबैतिर नबी बनाएर पठाइयो ।" (सहीह मुस्लिम, किताबुल मसाजिद) यसैप्रकार एउटा अर्को हदीसमा छ :

«كَانَ النَّبِيُّ يُبْعَثُ إِلَى قَوْمِهِ خَاصَّةً، وَبُعِثْتُ إِلَى النَّاسِ عَامَّةً»

"पहिले नबी कुनै एउटा समुदायतिर पठाइन्थ्यो तथा म सबैतिर नबी बनाएर पठाइएको हूँ ।"(सहीह बुख़ारी किताबुत तयम्मुम तथा मुस्लिम किताबुल मसाजिद)

रिसालत तथा नबूअतका पश्चात, एकेश्वरवादको वर्णन गरिंदैछ । यहाँ अल्लाहका चार गुणहरुको वर्णन छ ।

[2]यो पहिलो गुण हो अर्थात् सृष्टिमा अधिकृत मात्र त्यही हो, कोही अन्य होइन ।

[3]यसमा इसाई, यहूदी तथा केही ती अरब जातिहरुको खण्डन छ जो फरिश्ताहरुलाई अल्लाहका छोरीहरु भन्थे ।

[4]यसमा मूर्तिपूजक मिश्रणवादीहरु तथा दुई देवताहरु (असल-खराब, अन्धकार तथा प्रकाशका श्रेष्ठ) मा विश्वास राख्नेहरुको खण्डन छ ।

فَقَدَّرَهُۥ تَقۡدِيرٗا ②

निर्धारित रुप दिएको छ ।[1]

وَٱتَّخَذُواْ مِن دُونِهِۦٓ ءَالِهَةٗ لَّا يَخۡلُقُونَ شَيۡـٔٗا وَهُمۡ يُخۡلَقُونَ وَلَا يَمۡلِكُونَ لِأَنفُسِهِمۡ ضَرّٗا وَلَا نَفۡعٗا وَلَا يَمۡلِكُونَ مَوۡتٗا وَلَا حَيَوٰةٗ وَلَا نُشُورٗا ③

(३) तथा ती व्यक्तिहरुले अल्लाहका अतिरिक्त जसलाई आफ्ना देवता (पूज्य) बनाएका छन्, तिनीहरु कुनै वस्तुलाई सृष्टि गर्न सक्दैनन् बरु तिनीहरु स्वयं (कसैद्वारा) रचित गरिन्छ, । (बरु उनी स्वयं सृष्टि गरिन्छन् ।) उनीहरुलाई न त आफ्नो हानिको अधिकार प्राप्त छ र न जीवनको तथा न पुन: जीवित भई उठ्नुका उनीहरु अधिकारी छन् ।[2]

وَقَالَ ٱلَّذِينَ كَفَرُوٓاْ إِنۡ هَٰذَآ إِلَّآ إِفۡكٌ ٱفۡتَرَىٰهُ وَأَعَانَهُۥ عَلَيۡهِ قَوۡمٌ ءَاخَرُونَۖ فَقَدۡ جَآءُو ظُلۡمٗا وَزُورٗا ④

(४) तथा काफ़िरहरुले भने यो त मात्र उसले स्वयं रचेको झूठ हो, जसमा अन्य मानिसहरुले पनि यसको सहायता गरेका छन्,[3] वास्तवमा यी काफ़िर निकै अत्याचार तथा एकदम झूठका कर्ता भएका छन् ।

[1]प्रत्येक वस्तुको स्रष्टा केवल त्यही हो तथा आफ्नो नीति तथा इच्छा अनुसार उसले आफ्ना सृष्टिका प्रत्येक त्यो वस्तु पनि सुलह गरेको छ, जुन उसको लागि उचित छ अथवा प्रत्येक वस्तुको मृत्यु तथा जीविका उसले प्रारम्भदेखि नै निर्धारित गरिदिएको छ ।

[2]परन्तु अत्याचारीहरुले यस्ता गुणहरुबाट सुशोभित प्रभुलाई छाडेर यस्ता मानिसहरुलाई पूज्य बनाएका छन्, जो आफ्नो विषयमा पनि कुनै भलाईको शक्ति राख्दैन, यो कुरो त टाढै छ कि अरुका लागि केही गर्न सक्ने क्षमता राखून् । यस पश्चात नबूअतलाई अस्वीकार गर्नेहरुका सन्देहको खण्डन गरिंदैछ ।

[3]मूर्तिपूजक भन्दथे कि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) ले यो किताबको रचनामा यहूदीहरु अथवा उनका केही स्वतन्त्र गरिएका दास (जस्तै अबू फकिहा यसार,अदांस तथा जबर आदि) बाट सहायता लिएका छन् । जस्तो कि सूर: अन-नहल-१०३ मा यसको आवश्यक विवरण गुज्रिसकेको छ । यहाँ कुर्आनले यस आरोपलाई अत्याचार तथा झूठो बताएको छ । कसरी एक अनपढ व्यक्ति अरुहरुको सहायताले यस्तो किताब प्रस्तुत गर्नसक्छ जुन स्वच्छता तथा भाषाशैली एवं चमत्कारी वाक्य रचनामा अनुपम होस् । वास्तविकता तथा आत्मज्ञानको वर्णनमा पनि अद्वितीय, मनुष्यको जीवनका लागि आवश्यक आदेश एवं नियमका विस्तृत वर्णनमा पनि निरुत्तर होस् तथा भूतका सूचनाहरु तथा भविष्यमा घटित हुने घटनाहरुको बारे थाहा दिने तथा वर्णन गर्नुमा पनि त्यसको सत्यता निर्विवाद होस् ।

وَقَالُوٓا۟ أَسَٰطِيرُ ٱلْأَوَّلِينَ ٱكْتَتَبَهَا فَهِىَ تُمْلَىٰ عَلَيْهِ بُكْرَةً وَأَصِيلًا ⑤

(५) तथा यो पनि भने कि यो त पूर्वजहरुका कल्पित कथाहरु हुन् जुन उसले लेखेको छ, बस त्यही प्रातः सन्धया त्यसका समक्ष पढिन्छन् ।

قُلْ أَنزَلَهُ ٱلَّذِى يَعْلَمُ ٱلسِّرَّ فِى ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ ۚ إِنَّهُۥ كَانَ غَفُورًا رَّحِيمًا ⑥

(६) भनिदिनुस् कि यसलाई त्यस अल्लाहले अवतरित गरेको छ जो आकाश तथा धर्तीमा सबै गुप्त कुराहरु जान्दछ ।[1] निःसन्देह त्यो अत्यन्त क्षमाशील दयालु छ ।[2]

وَقَالُوا۟ مَالِ هَٰذَا ٱلرَّسُولِ يَأْكُلُ ٱلطَّعَامَ وَيَمْشِى فِى ٱلْأَسْوَاقِ ۙ لَوْلَآ أُنزِلَ إِلَيْهِ مَلَكٌ فَيَكُونَ مَعَهُۥ نَذِيرًا ⑦

(७) तथा उनीहरुले भने कि यो कस्तो रसूल हो कि भोजन गर्दछ, तथा बजारहरुमा हिंड्डुल गर्दछ[3] त्यसको पासमा, कुनै फरिश्ता (स्वर्गदूत) किन पठाइँदैन ताकि त्यो पनि उसँगै भएर तर्साउने बन्थ्यो ?[4]

[1]यो उनका झूठ तथा आक्षेपको उत्तरमा भने कि कुर्आनमा त हेर, यसमा के छ ? के यसमा त्रुटिको असत्य कुरा छ ? निःसन्देह छैन । बरु प्रत्येक कुरो सही तथा सत्य छ, यसकारण कि यसको अवतरण गर्ने त्यो हो जो धर्ती तथा आकाशको प्रत्येक गुप्त कुरो जान्दछ ।

[2]यसकारण त्यो क्षमा तथा अन्देखीबाट काम लिन्छ । अन्यथा उनीहरुको कुर्आन वनाउनुको आरोप अत्यन्त गम्भीर छ, जसको कारण तुरुन्तै अल्लाहको प्रकोपको पकडमा आउन सक्छ ।

[3]कुर्आनमाथि आरोपका पश्चात रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लममाथि आरोप लगाईदैछ अर्थात यो आरोप रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको मानव प्रकृतिमाथि छ । किनकि उनका विचारले मानव प्रकृति रिसालतको महानताको योग्य छैन । यसकारण उनीहरुले भने कि यो त खान्छ-पिउँछ तथा बजारमा आउने जाने गर्दछ तथा हामी जस्तै मानव हो, जबकि रसूल मनुष्य हुनु हुँदैन ।

[4]उपरोक्त वर्णित आपत्तिबाट तल झरेर भनिदैछ कि अरु केही नभए एउटा फरिश्ता नै त्यसको साथमा होस् जो उसको सहायक तथा पुष्टि गर्ने होस् ।

أَوْ يُلْقَىٰٓ إِلَيْهِ كَنزٌ أَوْ تَكُونُ لَهُۥ جَنَّةٌ يَأْكُلُ مِنْهَا ۚ وَقَالَ ٱلظَّٰلِمُونَ إِن تَتَّبِعُونَ إِلَّا رَجُلًا مَّسْحُورًا ⑧

(८) अथवा उसको पासमा कुनै कोष नै हालिदिइन्थ्यो[१] अथवा उसको कुनै बाग़ नै हुन्थ्यो जसबाट त्यो खान्थ्यो ।[२] तथा ती अत्याचारीहरुले भने कि तिमी त्यस्तो मनुष्यको पछि लागेका छौ जसमाथि जादू गरिदिइएको छ ।[३]

ٱنظُرْ كَيْفَ ضَرَبُوا۟ لَكَ ٱلْأَمْثَٰلَ فَضَلُّوا۟ فَلَا يَسْتَطِيعُونَ سَبِيلًا ⑨

(९) अलि सोच्नुस् त ! यिनीहरु तपाईंसित सम्बन्धित कस्ता-कस्ता कुरा गर्दछन्, कि जसबाट स्वयं नै विचलित भइराखेका छन् तथा कुनै प्रकारले पनि मार्गमा आउन सक्दैन ।[४]

تَبَارَكَ ٱلَّذِىٓ إِن شَآءَ جَعَلَ لَكَ خَيْرًا مِّن ذَٰلِكَ جَنَّٰتٍ تَجْرِى مِن تَحْتِهَا ٱلْأَنْهَٰرُ وَيَجْعَل لَّكَ قُصُورًا ⑩

(१०) अल्लाह (तआला) त यस्तो शुभकारी छ कि चाहन्छ भने तपाईंलाई यस्ता धेरै बगैंचाहरु प्रदान गरिदेओस्, जुन उनीद्वारा भनिएका बगैंचाहरुभन्दा अति उत्तम होऊन्, जसमा नदीहरु तरङ्गहरुका साथ बगिराखेका होऊन् तथा तपाईंलाई धेरै पक्का महलहरु पनि प्रदान गरिदेओस् ।[५]

---

[१]ताकि जीवन साधनका आवश्यकताहरुबाट निश्चिन्त हुन्थे ।

[२]ताकि उसको महत्व हामीभन्दा केही श्रेष्ठ हुन्थ्यो ।

[३]अर्थात् जसको बुद्धि तथा समझ जादूले प्रभावित तथ विकृत छ ।

[४]अर्थात् हे पैग़म्बर ! तपाईंको सम्बन्धमा यिनी यसप्रकारका कुरा तथा आक्षेप आरोपित गर्दछन्, कहिले जादूगर भन्दछन्, कहिले जादूले पीडित तथा पागल तथा कहिले झूठा एवं कवि भन्दछन् । परन्तु यी सबै कुरा असत्य हुन् जोसित अलिकति पनि बुद्धि एवं समझ छ, उनीहरु यिनका कुरा झूठा हुन् भन्ने जान्दछन् । अतः यिनीहरु यस्ता कुरा गरेर स्वयं नै मार्गदर्शनको पथबाट टाढा हुन पुग्छन्, उनीहरुलाई मार्गदर्शन कसरी प्राप्त हुनसक्दछ ?

[५]अर्थात् यिनीहरु तपाईंका लागि जुन माँग गर्दछन्, अल्लाहलाई ती कुरा पूरा गरिदिनु कठिन छैन, त्यसले चाहेको अवस्थामा तिनीभन्दा उत्तम बगैंचा तथा भवन संसारमा तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई प्रदान गर्न सक्दछ जुन तिनीहरुको विचारमा छन् । परन्तु उनका माँगहरु त झूठ्लाउन तथा द्वेषका कारण छन् न कि मार्गदर्शन प्राप्त गर्नका लागि तथा मोक्षको खोजीका लागि ।

بَلْ كَذَّبُوا بِالسَّاعَةِ وَأَعْتَدْنَا لِمَن كَذَّبَ بِالسَّاعَةِ سَعِيرًا ﴿١١﴾

(११) कुरो यो छ कि केयामत (प्रलय) लाई असत्य ठान्दछन् ।[1] तथा केयामतलाई झूठा भन्नेहरुका लागि हामीले प्रज्वल्लित अग्नि तयार गरेका छौं ।

إِذَا رَأَتْهُم مِّن مَّكَانٍ بَعِيدٍ سَمِعُوا لَهَا تَغَيُّظًا وَزَفِيرًا ﴿١٢﴾

(१२) जब उनीहरुले त्यसलाई टाढाबाट देख्नेछन् त त्यसको रिसले जुरमुराएको तथा आक्रोशले सुन्नेछन् ।[2]

وَإِذَا أُلْقُوا مِنْهَا مَكَانًا ضَيِّقًا مُّقَرَّنِينَ دَعَوْا هُنَالِكَ ثُبُورًا ﴿١٣﴾

(१३) तथा जब यिनीहरु नरकको कुनै संकुचित ठाउँमा बाँचिएर हुर्याइनेछन् अथवा फ्याँकिनेछन् तब त्यहाँ आफ्नो लागि विनाश नै पुकार्नेछन् ।

لَّا تَدْعُوا الْيَوْمَ ثُبُورًا وَاحِدًا وَادْعُوا ثُبُورًا كَثِيرًا ﴿١٤﴾

(१४) (उनीहरुसित भनिनेछ) आज एउटै मृत्युलाई न पुकार बरु धेरै मृत्युहरुलाई पुकार ।[3]

---

[1]केयामतलाई यो झुठ्लाउने कुरा नै रिसालतलाई झुठ्लाउनुको कारण हो ।

[2]अर्थात् नरक ती काफिरहरुलाई टाढाबाट नै हश्रको मैदानमा देखेर क्रोधले उम्लन थाल्नेछ तथा उनीहरुलाई आफ्नो भयानक यातनाबाट पीडित गर्नका लागि कराउने छ तथा क्रोधले जुर्मुराउने छ जस्तो कि एउटा अन्य स्थानमा आदेश छ :

﴿ إِذَا أُلْقُوا فِيهَا سَمِعُوا لَهَا شَهِيقًا وَهِيَ تَفُورُ ۞ تَكَادُ تَمَيَّزُ مِنَ الْغَيْظِ ﴾

"जब नरकमा जानेहरुलाई नरकमा हालिनेछन्, तब त्यसको गर्जन सुन्नेछन् तथा त्यो (क्रोधवश) उफ्रिराखेको हुनेछ, यस्तो प्रतीत हुनेछ कि त्यो क्रोधले च्यातिने छ ।" (सूरः अल-मुल्क-७, ८)

नरकले देख्नु तथा कराउनु एउटा वास्तविकता हो, कल्पना होइन । अल्लाहका लागि त्यसमा आभास तथा क्रोधको शक्ति उत्पन्न गरिदिनु कठिन होइन, त्यसले चाहेमा जे पनि गर्न सक्दछ । बोल्ने शक्ति पनि त अल्लाह तआलाले त्यसलाई प्रदान गर्नेछ तथा त्यसले ﴿ هَلْ مِن مَّزِيدٍ ﴾ को आवाज गर्नेछ । (सूरः काफ़-३०)

[3]अर्थात् नरकवासी जब नरकको यातनाबाट आत्तिएर कामना गर्नेछन् कि उनीहरुलाई मृत्यु आइहालोस् र उनीहरु विनष्ट भएर जाऊन् । त्यतिखेर उनीहरुसित भनिने छ कि अब एउटा मृत्युलाई होइन, धेरै मृत्युहरुलाई पुकार । अर्थ यो हो कि अब तिम्रा भाग्यमा विभिन्न प्रकारका यातनाहरु छन् । अर्थात् मृत्यु नै मृत्यु छ, तिमी कहाँसम्म मृत्युको माग गर्नेछौ !

قُلْ أَذٰلِكَ خَيْرٌ أَمْ جَنَّةُ الْخُلْدِ الَّتِي وُعِدَ الْمُتَّقُونَ ۚ كَانَتْ لَهُمْ جَزَاءً وَمَصِيرًا ﴿١٥﴾

(१५) तपाईं भन्नुस् कि यो राम्रो छ[1] अथवा त्यो स्थायी स्वर्ग जसको वचन परहेज़गारहरु (सदाचारीहरु) सित गरिएको छ जुन उनका प्रतिफल हो तथा उनको अन्तिम गन्तव्य हो ।

لَهُمْ فِيهَا مَا يَشَاءُونَ خَالِدِينَ ۚ كَانَ عَلَىٰ رَبِّكَ وَعْدًا مَسْئُولًا ﴿١٦﴾

(१६) तिनीहरुले जे चाहने छ त्यहाँ तिनीहरुका लागि उपस्थित हुनेछ, त्यसमा उनीहरु सधैं रहनेछन् । यो त तिम्रो पालनकर्ताको वचन हो जसको माँग गर्नुपर्छ ।[2]

وَيَوْمَ يَحْشُرُهُمْ وَمَا يَعْبُدُونَ مِنْ دُونِ اللَّهِ فَيَقُولُ أَأَنْتُمْ أَضْلَلْتُمْ عِبَادِي هَٰؤُلَاءِ أَمْ هُمْ ضَلُّوا السَّبِيلَ ﴿١٧﴾

(१७) तथा जुन दिन अल्लाह (तआलाले) उनीहरुलाई तथा अल्लाहलाई छाडि जसलाई उनीहरुलाई पूज्ने गर्दथे, एकत्रित गरी सोध्नेछ कि के तिमीहरुले मेरा यी भक्तहरुलाई पथ-भ्रष्ट गऱ्यौ अथवा यिनी स्वयं मार्ग-विचलित भए ।[3]

[1]"यो" संकेत हो नरकका वर्णित यातनाहरुतिर, जसमा नरकवासीहरु जकडिएका हुनेछन्, कि यो राम्रो छ जुन कुफ्र तथा मूर्तिपूजाको प्रतिकार हो अथवा त्यो स्वर्ग, जसको वचन अल्लाहले भय गर्नेहरुलाई उनीहरुबाट अल्लाहसित भय तथा अल्लाहका आदेशहरुको पालना गर्नुमा दिएको हो । यो प्रश्न नरकमा गरिनेछ परन्तु त्यसलाई यहाँ यसकारण वर्णित गरिएको छ कि शायद नरकवासीहरुका यस परिणामबाट शिक्षा प्राप्त गरी मानिसहरुले अल्लाहको भय तथा त्यसका आदेशहरुका पालनको मार्ग अपनाऊन् तथा यस दुष्परिणामबाट बाँचून् जसको चित्रण यहाँ गरिएको छ ।

[2]अर्थात् यस्तो वचन जुन अवश्य पूरा भएर नै रहने छ । जसरी ऋणको माँग गरिन्छ त्यसरी नै अल्लाहले आफूमाथि यो वाचा निश्चित गरिसकेको छ जसको माँग निष्ठावानहरु उसित गर्न सक्दछन् । यो केवल उसको दया तथा कृपा हो कि उसले ईमान भएका लागि यस उत्तम प्रतिफललाई आफ्नो लागि निश्चित गरिसकेको छ ।

[3]संसारमा अल्लाहबाहेक जसको पूजा गरिंदै आइराखिएको छ तथा गरिराखिने छ, त्यस मध्ये खनिज पदार्थ (पत्थर, काठ तथा अन्य धातुका मूर्तिहरु) पनि छन्, जुन निर्जीव छन् तथा अल्लाहका पुण्यकारी भक्तहरु पनि छन् जो सजीव छन् । जस्तै आदरणीय उजैर तथा आदरणीय मसीह तथा अन्य चर्चित व्यक्तिहरु । यस्तै फरिश्ताहरु तथा जिन्नातका पूजारी पनि हुनेछन् । अल्लाह तआलाले निर्जीव पदार्थहरुलाई पनि बुद्धि तथा समझ एवं बोल्ने शक्ति प्रदान गर्नेछ ।

قَالُوا سُبْحٰنَكَ مَا كَانَ يَنْۢبَغِيْ لَنَآ اَنْ نَّتَّخِذَ مِنْ دُوْنِكَ مِنْ اَوْلِيَآءَ وَلٰكِنْ مَّتَّعْتَهُمْ وَاٰبَآءَهُمْ حَتّٰى نَسُوا الذِّكْرَ ۚ وَكَانُوْا قَوْمًۢا بُوْرًا ⑱

(१८) उनीहरुले उत्तर दिनेछन् कि तिमी पवित्र छौ स्वयं हामीलाई शोभनीय थिएन कि तिमीलाई छाडि अरुहरुलाई आफ्ना कार्यक्षम बनाउँदथ्यौ,[1] वास्तविकता यो छ कि तिमीले यिनीहरुलाई र यिनका पूर्वजहरुलाई सम्पन्नता प्रदान गर्‍यौ, यहाँसम्मकि यिनी शिक्षाहरु बिर्सिहाले, यिनीहरु त थिए नै विनाश योग्य ।[2]

فَقَدْ كَذَّبُوْكُمْ بِمَا تَقُوْلُوْنَ ۙ فَمَا تَسْتَطِيْعُوْنَ صَرْفًا وَّلَا نَصْرًا ۚ وَمَنْ يَّظْلِمْ مِّنْكُمْ نُذِقْهُ عَذَابًا كَبِيْرًا ⑲

(१९) अत: उनीहरुले तिम्रा सम्पूर्ण कुरालाई असत्य भने । अब त तिमीमा न आफ्नो यातना हटाउनु शक्ति छ, न सहायता गर्नुको,[3] तिमीमध्ये जसले अत्याचार गरेको छ,[4] हामीले त्यसलाई घोर यातनाको स्वाद चखाउनेछौं ।

तथा ती सबै देवताहरुसित सोध्ने छ कि बताउ मेरा भक्तहरुलाई तिमीले आफ्नो पूजाको आदेश दिएका थियौ अथवा यिनीहरु आफ्नै इच्छाले तिम्रो पूजा गरेर मार्ग विचलित भएका थिए ?

[1]अर्थात् जब हामीले स्वयं तिमी बाहेक कसैलाई कार्यक्षम ठान्दैनथ्यौं, त हामीले आफ्नो विषयमा कसरी मानिसहरुसित भन्न सक्दथ्यौं कि तिमी अल्लाहलाई छाडि हामीलाई आफ्ना रक्षक एवं कार्यक्षम ठान ।

[2]यो शिर्कको कारण हो कि सांसारिक धन तथा साधनको प्रशस्तताले उनीहरुलाई निश्चिन्त गरिदियो तथा विनाश उनीहरुको दुर्भाग्य बन्यो ।

[3]यो अल्लाह तआलाको कथन हो जुन मूर्तिपूजकहरुलाई सम्बोधन गरेर अल्लाह तआलाले भन्नेछ कि तिमीहरुले जसलाई आफ्ना देवता ठान्दथ्यौ उनीहरुले तिमीलाई तिम्रा कुरामा झूठा भनिदिएका छन् तथा तिमीले देखिहाल्यौ कि उनीहरुले तिमीबाट अलग्ग हुने घोषणा गरिदिएका छन् । अर्थात जसलाई तिमीले आफ्ना ठान्दथ्यौ, उनीहरु सहायक सिद्ध भएनन् । अब के तिमीमा यो शक्ति छ कि मेरो यातनालाई आफूबाट हटाउन सक्दछौ तथा आफ्नो सहायता गर्न सक्दछौ ?

[4]अत्याचारीसित तात्पर्य त्यो शिर्क (मिश्रणवाद) हो, जस्तो कि पूर्व कथनबाट स्पष्ट छ । तथा कुरआनमा अन्य स्थानमा शिर्क (अल्लाहका अतिरिक्त अन्यको पूजालाई) महाअत्याचार भनिएको छ ।﴿إِنَّ الشِّرْكَ لَظُلْمٌ عَظِيمٌ﴾ (वास्तवमा शिर्क घोर अत्याचार हो) । (सूर: लुकमान-१३)

وَمَآ أَرۡسَلۡنَا قَبۡلَكَ مِنَ ٱلۡمُرۡسَلِينَ إِلَّآ إِنَّهُمۡ لَيَأۡكُلُونَ ٱلطَّعَامَ وَيَمۡشُونَ فِي ٱلۡأَسۡوَاقِۗ وَجَعَلۡنَا بَعۡضَكُمۡ لِبَعۡضٖ فِتۡنَةً أَتَصۡبِرُونَۗ وَكَانَ رَبُّكَ بَصِيرٗا ۝٢٠

(२०) तथा हामीले तपाईंभन्दा पूर्व जति पनि रसूलहरु पठायौं ती सबै भोजन पनि गर्दथे[1] तथा बजारहरुमा हिंड्डुल पनि गर्दथे।[2] तथा हामीले तिमीमध्ये प्रत्येकलाई अन्यको परीक्षाको साधन बनाइदियौं।[3] के तिमीले धैर्य राख्नेछौ ? तथा तिम्रो प्रभु सबै कुरा देख्दछ।[4]

[1]अर्थात् उनीहरु मनुष्य थिए तथा भोजनका स्पृही (अभिलाषी)

[2]अर्थात् मान्य जीविको उपार्जनका लागि श्रम तथा व्यापार पनि गर्दथे। यसमा अर्थ यो छ कि यो कुरा नबूअतका गरिमा अनुरुप हुन्, विपरीत होइनन् जस्तो कि केही मानिसहरु ठान्दछन्।

[3]अर्थात् हामीले ती नबीहरुको तथा उनीहरुद्वारा तिनीहरुमाथि ईमान स्थापित गर्नेहरुका परीक्षा लियौं, ताकि सत्य र असत्यमा अन्तर स्पष्ट होओस्, जसले परीक्षामा धैर्य धारण गरे उनीहरु सफल तथा अन्य असफल रहे। यसकारण अगाडी आदेश गऱ्यो : "के तिमी धैर्य राख्नेछौ ?" (कुर्आन मजीद)

[4]अर्थात् त्यो जान्दछ कि प्रकाशना (वह्य) तथा रिसालतका लागि योग्य को छ तथा को छैन ﴿ٱللَّهُ أَعۡلَمُ حَيۡثُ يَجۡعَلُ رِسَالَتَهُۥ﴾ हदीसमा पनि चर्चित छ रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि अल्लाह तआलाले मलाई अधिकार दियो कि राजा नबी बनूँ अथवा दास रसूल ? मैले दास रसूल बन्न स्वीकार गरें। (इब्ने कसीर)

وَقَالَ الَّذِيْنَ لَا يَرْجُوْنَ لِقَاۤءَنَا لَوْلَآ اُنْزِلَ عَلَيْنَا الْمَلٰۤئِكَةُ اَوْ نَرٰى رَبَّنَا ؕ لَقَدِ اسْتَكْبَرُوْا فِيْۤ اَنْفُسِهِمْ وَعَتَوْ عُتُوًّا كَبِيْرًا ﴿٢١﴾

(२१) तथा जसलाई हामीसित साक्षात्कार को आशा छैन उनीहरुले भने कि हामीतिर फरिश्ताहरु किन अवतरित गरिन्नन् ?[1] अथवा हामीले (आफ्ना आँखाले) आफ्ना प्रभुलाई देख्थ्यौं ?[2] उनीहरुले स्वयं आफूलाई नै बडो ठूलो ठानेका छन् तथा अत्याधिक अवज्ञा गरेका छन् ।[3]

يَوْمَ يَرَوْنَ الْمَلٰۤئِكَةَ لَا بُشْرٰى يَوْمَئِذٍ لِّلْمُجْرِمِيْنَ وَيَقُوْلُوْنَ

(२२) जुन दिन यिनीहरुले फरिश्ताहरुलाई देख्नेछन् त्यस दिन यी पापीहरुलाई कुनै प्रसन्नता हुनेछैन[4] तथा भन्नेछन् कि यिनीहरु बञ्चित नै

[1]अर्थात् कुनै मनुष्यलाई रसूल बनाउनुको सट्टा कुनै फरिश्तालाई रसूल बनाएर पठाइन्थ्यो । अथवा यो अर्थ हो कि पैगम्बरसँग फरिश्ताहरु पनि अवतरित हुन्थे जसलाई हामीले आफ्ना आँखाले देख्दथ्यौं तथा उनीहरुले यस मानव रसूलको पुष्टि गर्दथे ।

[2]अर्थात् प्रभुले आएर हामीलाई भन्थ्यो कि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) मेरो रसूल तथा त्यसमाथि ईमान कायम गर्नु तिम्रो लागि आवश्यक छ ।

[3]त्यसै अहङकार तथा उद्दण्डताको परिणाम हो कि उनीहरु यसप्रकारको माँग गरिराखेका छन्, जुन अल्लाह तआलाको इच्छाको विपरीत छ । अल्लाह तआला त परोक्षमाथि ईमानद्वारा मानिसहरुको परीक्षा लिन्छ । यदि उसले फरिश्ताहरुलाई उनका आँखा समक्ष अवतरित गरिदेओस् अथवा त्यो स्वयं धर्तीमा अवतरित होस् त त्यस पश्चात उनको परीक्षाको प्रश्न नै समाप्त भइहाल्यो, यसकारण अल्लाह तआलाले यस्ता कार्य किन गरोस्, जुन उसको सृष्टिको उत्पत्तिको निधि तथा इच्छाको विपरीत छ ?

[4]त्यस दिनसित तात्पर्य मृत्युको दिन छ अर्थात यी काफिर फरिश्ताहरुलाई देख्ने इच्छा गर्दछन्, परन्तु मृत्युका समय फरिश्ताहरुलाई देख्नेछन्, त्यतिखेर उनको लागि कुनै प्रसन्नता एवं शुभ हुने छैन, यसकारण कि फरिश्ताहरुले उनीहरुलाई त्यस बखत नरकको यातनाको धम्कीको सूचना दिन्छन् तथा भन्दछन् कि हे कुकर्मी आत्मा, कुकर्मी शरीरबाट निस्क, जसले गर्दा आत्मा भाग्छ, तर्कन्छ, अनि फरिश्ताहरु त्यसलाई कुटपिट गर्छन्, जस्तो कि सूर: अल-अंफ़ाल-५० तथा अल-अनआम-९३ मा छ । यसका विपरीत ईमान भएका मानिसहरुको स्थिति प्राण निस्कने बेला यो हुन्छ कि फरिश्ताहरु (स्वर्गदूतहरु) यसलाई स्वर्ग तथा त्यसका सुखहरुको शुभसूचना सुनाउँछन् । जस्तो कि सूर: हा.मीम.अस्सजद: ३० देखि ३२ मा छ तथा हदीसमा पनि चर्चित छ कि "फरिश्ताहरु (स्वर्गदूतहरु) ईमान भएका

حِجۡرٗا مَّحۡجُورٗا ٢٢

गरिए ।[1]

وَقَدِمۡنَآ إِلَىٰ مَا عَمِلُواْ مِنۡ عَمَلٖ فَجَعَلۡنَٰهُ هَبَآءٗ مَّنثُورًا ٢٣

(२३) तथा उनीहरुले जे-जे कर्म गरेका छन्, हामीले उनीतिर आकर्षित भएर उनीहरुलाई कणहरु जस्तै अस्त-व्यस्त गरिदियौं ।[2]

मानिसहरुका आत्मासित भन्दछन्, हे पवित्र आत्मा, जुन पवित्र शरीरमा थियो, निस्क ! तथा यस्ता ठाउँमा हिंड जहाँ अल्लाहका उपहार छन् तथा त्यो प्रभु हो, जो तिमीसित प्रसन्न छ ।" (विस्तृत जानकारीका लागि हेर्नुस् मुसनद अहमद भाग-२, पृष्ठ ३६४ तथा ३६५ र इब्ने माजा किताबुज् ज़ोहद बाब जिक्रूल मौत) केही विद्वानहरुको भनाई छ कि यसबाट तात्पर्य केयामतको दिन हो । इमाम इब्ने कसीर भन्नुहुन्छ कि दुबै कथन ठीक छन् यसकारण कि दुबै दिन यस्ता छन् जबकि फरिश्ताहरु ईमान भएका तथा काफ़िर दुबैका समक्ष प्रकट हुन्छन् । ईमान भएका मानिसहरुका लागि कृपा तथा अल्लाहका उपहारहरुको शुभ-सूचना तथा काफ़िरहरुका विनाश तथा हानिको सूचना दिन्छन् ।

[1] حِجۡــر को मूल अर्थ हो मनाही गर्नु, रोकदिनु । जसरी न्यायधीश कसैलाई उसको मूर्खता तथा बाल्यवस्थाको कारण उसको आफ्नो मालमध्ये व्यय गर्नबाट रोकदिन्छ त भन्दछन् حَجَرَ القاضي على فلان न्यायधीशको तर्फबाट अमूकलाई व्यय गर्नुबाट रोक दिइएको छ । यस भावार्थको आधारमा ख़ानये काअबाको त्यस माग (हतीम) लाई حجر भनिन्छ जसलाई मक्काका कुरैशले ख़ानये काअ़बामा सम्मिलित गरेका थिएनन् । तसर्थ परिक्रमा गर्न मनाही छ । परिक्रमा गर्दाखेरि त्यसको बाहिरी भागबाट हिंड्नुपर्छ जसलाई दिवार (पर्खाल) बाट अलग गरिदिइएको छ । तथा बुद्धिलाई पनि حجر भनिन्छ, यसकारण कि बुद्धिले पनि मनुष्यलाई यस्ता कार्यहरुबाट रोक्दछ, जुन मनुष्यको योग्य छैन । अर्थ यो हो कि फरिश्ताहरु काफ़िरहरुसित भन्दछन् कि तिमी ती कुराहरुबाट वञ्चित छौ जसको शुभ-सूचना अल्लाहसित तर्सनेहरुलाई दिइन्छ । अर्थात यो حراما محرما عليكم का अर्थहरुमा छ । आज जन्नतुल फिरदौस (स्वर्गको सर्वोच्च स्थान) तथा त्यसका सुख तिमीलाई हराम (निषेध) छन्, त्यसका अधिकारी केवल ईमान भएका तथा अल्लाहसित तर्सनेहरु हुनेछन् ।

[2] هبـــاء ती सूक्ष्म कणहरुलाई भन्दछन्, जुन कुनै क्षेत्रबाट घरभित्र प्रवेश हुने सूर्यका किरणहरुमा देखिन्छन्, परन्तु यदि कोही उनलाई हातले समात्न चाहन्छ त यो संभव छैन । काफ़िरहरुका कर्म पनि केयामतका दिन यिनै कणहरु जस्तो बेकार हुनेछन्, किनकि उनी ईमान तथा पवित्रताबाट शून्य हुनेछन् तथा धार्मिक नियमहरुको अनुकूलतामा पनि खाली हुनेछन् । जबकि अल्लाहका समक्ष स्वीकृतिका लागि यी दुबै कुरा हुनु आवश्यक छ । ईमान तथा शुद्धता पनि तथा इस्लामी धार्मिक नियमहरुका अनुरुप पनि । यहाँ काफ़िरका कर्महरुलाई बेकार कणहरुको समतुल्य भनिएको छ । त्यसैप्रकार अन्य

أَصْحٰبُ الْجَنَّةِ يَوْمَئِذٍ خَيْرٌ مُّسْتَقَرًّا وَّأَحْسَنُ مَقِيلًا ﴿٢٤﴾

(२४) (परन्तु) त्यस दिन स्वर्गवासीहरुको स्थान श्रेष्ठतम् हुनेछ तथा स्वप्नगृह पनि सुखद हुनेछ ।[1]

وَيَوْمَ تَشَقَّقُ السَّمَاءُ بِالْغَمَامِ وَنُزِّلَ الْمَلٰٓئِكَةُ تَنْزِيلًا ﴿٢٥﴾

(२५) तथा जुन दिन आकाश बादल सहित फाट्नेछ[2] तथा फरिश्ताहरु निरन्तर अवतरित गरिने छन् ।

اَلْمُلْكُ يَوْمَئِذِنِ الْحَقُّ لِلرَّحْمٰنِ ۚ وَكَانَ يَوْمًا عَلَى الْكٰفِرِينَ عَسِيرًا ﴿٢٦﴾

(२६) त्यस दिन उचित रुपले राज्य केवल दयालुको नै हुनेछ तथा यो दिन काफिरहरुका लागि बडो गाह्रो हुन्छ ।

وَيَوْمَ يَعَضُّ الظَّالِمُ عَلٰى يَدَيْهِ يَقُولُ يٰلَيْتَنِي اتَّخَذْتُ مَعَ الرَّسُولِ سَبِيلًا ﴿٢٧﴾

(२७) तथा जुन दिन अत्याचारीले आफ्ना हातहरुलाई टोकी-टोकी भन्नेछ कि हाय ! क्या राम्रो हुन्थ्यो यदि मैले रसूलको मार्ग अपनाएको भए ।

يٰوَيْلَتٰى لَيْتَنِي لَمْ أَتَّخِذْ فُلَانًا خَلِيلًا ﴿٢٨﴾

(२८) हाय ! अफसोच, यदि मैले अमूकलाई मित्र नबनाएको भए ।[3]

स्थानहरुमा कहीं खरानीसित, कहीं मृगतृष्णासित तथा कहीं पत्थरसित तुलना गरिएको छ । ती सम्पूर्ण उपमाहरु पूर्वमा गुज्रिसकेका छन् । (हेर्नुस् सूर: अल-बक़र:-२६४, सूर: इब्राहीम-१८ तथा सूर: अन्नूर-२)

[1]केही विद्वानहरुले यसबाट यो अर्थ निकालेका छन् कि ईमान भएका मानिसहरुका लागि केयामतको यो भयानक दिन यति क्षीण तथा उनको हिसाब यति सरल हुनेछ कि मध्यान्हसम्म उनी स्वतन्त्र हुनेछन् तथा स्वर्गमा यिनी आफ्ना परिवारका सदस्यहरु तथा हूरहरुका साथ मध्यान्हमा विश्राम गरिराखेका हुनेछन् जस्तो कि हदीसमा छ कि ईमान भएका मानिसहरुका लागि त्यो यति सहज हुनेछ कि जतिमा संसारमा एक अनिवार्य नमाज़ पूरा गर्नु । (मुसनद अहमद भाग-४, पृष्ठ ७५)

[2]यसको अर्थ यो हो कि आकाश फाट्नेछ तथा बादल छायाँ बन्नेछ, अल्लाह तआला फरिश्ताहरु माझ, हश्रको मैदानमा, जहाँ सम्पूर्ण सृष्टि एकत्रित हुनेछ, हिसाब-किताब साक्षात दर्शन दिनेछन्, जस्तो कि सूर: अल-बक़र आयत २१० बाट पनि स्पष्ट छ ।

[3]यसबाट ज्ञात भयो कि अल्लाहका अवज्ञाकारीहरुसित सम्बन्ध एवं मित्रता राख्नु हुन्न, यसकारण कि सज्जन व्यक्तिको संगतमा मनुष्य सज्जन तथा दुर्जन व्यक्तिको संगतले मनुष्यलाई नराम्रो बनाईदिन्छ । अधिकतर मानिसहरुको मार्ग विचलनको कारण गलत मित्रहरुको चयन तथा नराम्रोको संगत अपनाउनु नै हो ।

لَقَدْ أَضَلَّنِي عَنِ الذِّكْرِ بَعْدَ إِذْ جَاءَنِي ۗ وَكَانَ الشَّيْطَانُ لِلْإِنسَانِ خَذُولًا ﴿٢٩﴾

(२९) त्यसले मलाई भ्रमित पारी शिक्षाबाट विमुख गरिदियो, यस पश्चात कि मेरो पासमा आइसकेको थियो तथा शैतान त मनुष्यलाई (समयमा) धोका दिनेवाला हो।

وَقَالَ الرَّسُولُ يَا رَبِّ إِنَّ قَوْمِي اتَّخَذُوا هَٰذَا الْقُرْآنَ مَهْجُورًا ﴿٣٠﴾

(३०) तथा रसूलले भन्नेछ कि हे मेरो प्रभु नि:सन्देह मेरो समुदायले यस कुर्आनलाई छाडिसकेको थियो।[1]

وَكَذَٰلِكَ جَعَلْنَا لِكُلِّ نَبِيٍّ عَدُوًّا مِّنَ الْمُجْرِمِينَ ۗ وَكَفَىٰ بِرَبِّكَ هَادِيًا وَنَصِيرًا ﴿٣١﴾

(३१) तथा यसैप्रकार हामीले नबीका शत्रु केही पापीहरुलाई बनाइदिएका छौं,[2] तथा तिम्रो प्रभु नै मार्गदर्शन दिनका लागि सहायता गर्न पर्याप्त छ।[3]

---

यसकारण हदीसमा पनि पुण्य कार्य गर्नेहरुको संगतमा जोड दिइन्छ तथा नराम्रो संगतबाट पन्छिन एउटा अति उत्तम उदाहरणबाट बुझाइएको छ। (हेर्नुस् सहीह मुस्लिम किताबुल बिर्र वस्सिल:, बाब इस्तेहबाब मजालिसि स्वालेहीन)

[1]मूर्तिपूजक कुर्आनको पाठ गर्दाखेरि निकै हल्ला गर्दथे ताकि कुर्आन सुन्न नसकियोस्, यो पनि त्याग दिनु हो, यसमाथि ईमान स्थापित नगर्न तथा कर्म नगर्नु, पनि त्याग दिनु हो। यसमाथि विचार एवं ध्यान नदिनु तथा यसका आदेश अनुसार कर्म न गर्नु तथा निषेधित न बच्नु पनि त्याग दिनु हो। यसैगरी यसलाई छाडि कुनै अन्य किताबलाई वरीयता दिनु, यो पनि त्याग दिनु हो अर्थात कुर्आनलाई अलग्ग गर्नु, त्यसलाई त्याग दिनु हो, जसका विरूद्ध केयामतका दिन अल्लाहका पैग़म्बर अल्लाह समक्ष वाद प्रस्तुत गर्नेछन्।

[2]अर्थात् जुनप्रकार हे मुहम्मद! (सल्लल्लाहु अलैहि वसल्लम) तिम्रो समुदाय मध्ये ती मानिसहरु तिम्रा शत्रु हुन् जसले कुर्आन त्यागिदिए, यसैप्रकार पूर्वकालिक समुदायमा पनि थियो अर्थात प्रत्येक नबीका शत्रु ती मानिसहरु हुन्थे जो पापी थिए। यिनीहरुले मानिसहरुलाई मार्ग-विचलनतिर आमन्त्रित गर्दथे। सूर: अल-अनाम आयत संख्या ११२ मा पनि यो विषय वर्णन गरिएको छ।

[3]अर्थात् यी काफ़िर यद्यपि मानिसहरुलाई अल्लाहका मार्गबाट रोक्दछन्, परन्तु तिम्रा प्रभुले जसलाई प्रकाश दिन्छ, त्यसलाई प्रकाशबाट कसले रोक्न सक्दछ, वास्तवमा पथ-प्रदर्शक एवं सहायक त तिम्रो पालनकर्ता नै हो।

وَقَالَ الَّذِينَ كَفَرُوا لَوْلَا نُزِّلَ عَلَيْهِ الْقُرْآنُ جُمْلَةً وَاحِدَةً ۚ كَذَٰلِكَ لِنُثَبِّتَ بِهِ فُؤَادَكَ ۖ وَرَتَّلْنَاهُ تَرْتِيلًا ﴿٣٢﴾

(३२) तथा काफ़िरहरुले भने कि त्यसमाथि सम्पूर्ण कुरआ़न एकैचोटि किन अवतरित गरिएन ?[1] यसैप्रकार (हामीले अलि-अलि अवतरित गऱ्यौं) ताकि हामीले तपाईंका हृदयलाई दृढता प्रदान गरौं, तथा हामीले रोकी-रोकी नै पढेर सुनाएका हौं ।[2]

وَلَا يَأْتُونَكَ بِمَثَلٍ إِلَّا جِئْنَاكَ بِالْحَقِّ وَأَحْسَنَ تَفْسِيرًا ﴿٣٣﴾

(३३) तथा यिनीहरुले जुन पनि उदाहरण लिएर आउने छन्, हामीले त्यसको सत्य उत्तर तथा उचित व्याख्या बताइदिनेछौं ।[3]

الَّذِينَ يُحْشَرُونَ عَلَىٰ وُجُوهِهِمْ إِلَىٰ جَهَنَّمَ أُولَٰئِكَ شَرٌّ مَّكَانًا وَأَضَلُّ سَبِيلًا ﴿٣٤﴾

(३४) जुन मानिसहरु मुख तल पारिएको अवस्थामा नरकतिर एकत्रित गरिनेछन् । ती नै नराम्रा स्थान भएका तथा मार्ग-विचलित भएका हुनेछन् ।

---

[1]जसरी तौरात, इंजील एवं ज़बूर आदि किताबहरु एकै पटकमा अवतरित भए ।

[2]अल्लाह तआ़लाले उत्तर दियो कि हामीले समय तथा आवश्यकता अनुसार यस कुरआ़नलाई लगभग २३ वर्षमा अलि-अलि गरी अवतरित गऱ्यौं ताकि हे पैग़म्बर ! तिम्रा तथा निष्ठावानहरुका हृदय दृढ होऊन तथा उनीहरुलाई राम्ररी कण्ठ हुनसकोस् । जस्तो अन्य स्थानमा :

﴿ وَقُرْآنًا فَرَقْنَاهُ لِتَقْرَأَهُ عَلَى النَّاسِ عَلَىٰ مُكْثٍ وَنَزَّلْنَاهُ تَنزِيلًا ﴾

"तथा कुरआन, यसलाई हामीले अलग-अलग गऱ्यौं, ताकि तिमी यसलाई मानिसहरुका लागि रोकि-रोकि पढ तथा हामीले यसलाई अन्तरालले अवतरित गऱ्यौं ।" (सूरः बनी इस्राईल-१०६)

यस कुरआनको तुलना वर्षाको समान छ । वर्षा जतिखेर पनि हुन्छ, मृत धर्तीमा जीवनको लहर दगुरन्छ तथा यो लाभ सामान्यतया त्यस बखत हुन्छ, जब वर्षा समय-समयमा होस् न कि एकै पटकमा भएर समाप्त होस् ।

[3]यो कुरआनलाई अंतरालले अवतरण गरिनुको नीति तथा कारण वर्णन गरिंदैछ छ कि यी मूर्तिपूजक जहिले पनि कुनै उदाहरण अथवा आपत्ति एवं सन्देह प्रस्तुत गर्नेछन्, त कुरआनद्वारा हामीले त्यसको उत्तर अथवा स्पष्टीकरण प्रस्तुत गर्नेछौं तथा यसप्रकार उनीहरुलाई विचलित पार्ने अवसर हुनेछैन ।

وَلَقَدْ آتَيْنَا مُوسَى الْكِتَابَ وَجَعَلْنَا مَعَهُ أَخَاهُ هَارُونَ وَزِيرًا ﴿٣٥﴾

(३५) त्यो निःसन्देह हामीले मूसालाई किताव प्रदान गर्‍यौं तथा उनीसँग उनका भाइ हारुनलाई उनको सहायक बनायौं ।

فَقُلْنَا اذْهَبَا إِلَى الْقَوْمِ الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا فَدَمَّرْنَاهُمْ تَدْمِيرًا ﴿٣٦﴾

(३६) तथा भन्यौं कि तिमी दुवै ती मानिसहरुतिर जाऊ जसले हाम्रा निशानी (लक्षणहरु) लाई झुठ्लाई राखेका छन् । अनि हामीले उनीहरुलाई एकदम ध्वस्त पारिदियौं ।

وَقَوْمَ نُوحٍ لَمَّا كَذَّبُوا الرُّسُلَ أَغْرَقْنَاهُمْ وَجَعَلْنَاهُمْ لِلنَّاسِ آيَةً ۖ وَأَعْتَدْنَا لِلظَّالِمِينَ عَذَابًا أَلِيمًا ﴿٣٧﴾

(३७) तथा नूहका समुदायले पनि जब रसूलहरुलाई झूठा भने त हामीले उनीहरुलाई डुबाइदियौं तथा मानिसहरुका लागि शिक्षा प्राप्त गर्न उनीहरुलाई प्रतीक बनाइदियौं तथा हमीले अत्याचारीहरुका लागि दुखदायी यातना तयार गरेका छौं ।

وَعَادًا وَثَمُودَ وَأَصْحَابَ الرَّسِّ وَقُرُونًا بَيْنَ ذَٰلِكَ كَثِيرًا ﴿٣٨﴾

(३८) तथा 'आद' जाति तथा 'समूद' जाति एवं इनारवालाहरुलाई[१] तथा उनीहरुका मध्येका धेरैजसो समुदायलाई[२] (नाश गरिदियौं) ।

وَكُلًّا ضَرَبْنَا لَهُ الْأَمْثَالَ ۖ وَكُلًّا تَبَّرْنَا تَتْبِيرًا ﴿٣٩﴾

(३९) तथा हामीले प्रत्येकका समक्ष उदाहरणहरुका वर्णन गर्‍यौं,[३] तत्पश्चात प्रत्येकलाई पूर्णरुपले नाश गरिदियौं ।[४]



[१] رس (रस्स) को अर्थ हो इनार, أصحاب الرس को अर्थ भयो इनारवाला । यसको निर्धारणमा व्याख्याकारहरुमा मतभेद छ, इमाम इब्ने जरीर तवरीले भनेका छन्, यसवाट तात्पर्य खाई (खाल्डा) वाला हुन्, जसको वर्णन सूरः अल-बुरूजमा छ । (इब्ने कसीर)

[२] قرن को उचित अर्थ हो समकालिक मानिसहरुका एउटा समूह । जब एउटा वंशका मानिसहरु समाप्त हुन्छन् त दोस्रो जातिलाई दोस्रो कर्न भनिनेछ । (इब्ने कसीर) ।

[३]अर्थात् प्रमाणका आधारमा हामीले सत्यता प्रमाणित गरिदियौं ।

[४]अर्थात् सत्यता प्रमाणित भए पश्चात ।

وَلَقَدْ أَتَوْا عَلَى الْقَرْيَةِ الَّتِي أُمْطِرَتْ مَطَرَ السَّوْءِ ۚ أَفَلَمْ يَكُونُوا يَرَوْنَهَا ۚ بَلْ كَانُوا لَا يَرْجُونَ نُشُورًا ﴿٤٠﴾

(४०) तथा यिनीहरु त त्यस वस्तीबाट भएर ओहर-दोहर गर्छन्, जसमाथि नराम्रो वर्षा गरियो ।[1] के यिनीहरु तैपनि त्यसलाई देख्दैनन् ? वास्तविकता यो हो कि उनीहरुलाई मर पश्चात पुन: जीवित भई उभिने कुर ामा विश्वास नै छैन ।[2]

وَإِذَا رَأَوْكَ إِنْ يَتَّخِذُونَكَ إِلَّا هُزُوًا أَهَٰذَا الَّذِي بَعَثَ اللَّهُ رَسُولًا ﴿٤١﴾

(४१) तथा जब तिमीलाई कुनै बेला देख्दछन् त तिमीसित उपहास गर्न थाल्दछन् कि के यिनै त्यो व्यक्ति हुन् जसलाई अल्लाहले रसूल बनाएर पठाएको छ ।[3]

إِنْ كَادَ لَيُضِلُّنَا عَنْ آلِهَتِنَا لَوْلَا أَنْ

(४२) हामी डटिरहयौं अन्यथा यिनले त हामीलाई हाम्रा देवताहरुबाट

[1]वस्तीबाट लूतका समुदायका बस्तीहरु सदुम तथा अमूरा आदि तात्पर्य हुन् तथा नराम्रो वर्षासित ढुङ्गाका वर्षा तात्पर्य हो । यी वस्तीहरुलाई उल्टाइएको थियो तत्पश्चात उनीहरुमाथि कंकड-पत्थरको वर्षा गरिएको थियो, जस्तो कि सूर: हूद-८२ मा वर्णन गरिएको छ । यी बस्तीहरु सीरिया तथा फिलिस्तीनका मार्गमा पर्छन्, जसबाट भएर मक्कावासी आउने-जाने गर्दथे ।

[2]यसकारण यी ध्वस्त गरिएका बस्तीहरु तथा तिनका भग्नावशेषहरु देखे पश्चात शिक्षा ग्रहण गर्दैनन् । तथा अल्लाहका आयतहरु तथा अल्लाहका रसूललाई झूठलाउनबाट रोकिन्नन् ।

[3]अन्य स्थानमा अल्लाहले यसप्रकार भन्यो :

﴿أَهَٰذَا الَّذِي يَذْكُرُ آلِهَتَكُمْ﴾

"के यो त्यही व्यक्ति हो, जसले तिम्रा देवताहरुको दुर्गुण वर्णन गर्दछ ?" (सूर: अल-अंबिया-३६)

अर्थात् उनीहरुका विषयमा भन्दछ कि उनीहरुसँग कुनै अधिकार छैन । यस वास्तविकताको प्रदर्शन नै मूर्तिपूजकहरुका निकट उनका देवताहरुको अपमान थियो, जस्तो आज पनि कब्र पूज्नेहरुसित भनियोस् कि चिहानहरुमा गाडिएका महात्मा सृष्टिमा हस्तक्षेप गर्ने अधिकार राख्दैनन् । त भन्दछन् कि यिनीहरु अल्लाहका मित्रहरु समानलाई अपमानित गरिराखेका छन् ।

صَبَرْنَا عَلَيْهَا ۚ وَسَوْفَ يَعْلَمُونَ حِينَ يَرَوْنَ الْعَذَابَ مَنْ أَضَلُّ سَبِيلًا ﴿٤٢﴾

मार्ग विचलित गर्न उनीहरुले कुनै कमी बाँकी राखेका थिएनन् ।[1] तथा जब यातनाहरुलाई देख्नेछन् त उनीहरुलाई स्पष्ट रुपमा ज्ञात हुनेछ कि पूर्णरुपले मार्गबाट विचलित भएको को थियो ?[2]

أَرَأَيْتَ مَنِ اتَّخَذَ إِلَٰهَهُ هَوَاهُ أَفَأَنْتَ تَكُونُ عَلَيْهِ وَكِيلًا ﴿٤٣﴾

(४३) के तपाईंले त्यसलाई पनि देख्नु भयो जसले आफ्ना मनोकाँक्षाहरुलाई आफ्ना देवताहरु बनाएको छ, के तपाईं त्यसको उत्तरदायी हुन सक्नुहुन्छ ।[3]

[1]अर्थात् हामी नै आफ्ना पूर्वजहरुको अनुकरण तथा प्रचलित धर्मसित सम्बन्ध राख्नुका कारण अल्लाहका अतिरिक्त अन्यका पूजाबाट आफूलाई रोकेनौं, अन्यथा यस पैगम्बरले हामीलाई विचलित पार्नमा कुनै कसर बाँकी राखेन । अल्लाह तआलाले मूर्तिपूजकहरुको यो कथन वर्णन गरेको छ कि उनीहरु कसरी मूर्तिपूजामा अडिग छन् कि त्यसमाथि गर्व गरिराखेका छन् ।

[2]अर्थात् यस लोकमा त मूर्तिपूजकहरु तथा अल्लाहका अतिरिक्त अन्यका पूजारीहरुलाई एकेश्वरवादका अनुयायी विचलित भएका रुपमा देखिन्छन्, परन्तु जब यिनीहरु अल्लाहका दरबारमा पुग्नेछन् तथा त्यहाँ उनीहरुलाई मूर्तिपूजाका कारण अल्लाहको यातना भोग्नुपर्ने छ, अनि मात्र थाहा पाउने छन् कि को मार्ग-विचलित थियो ? अल्लाहको पूजा गर्ने अथवा द्वार-द्वारमा आफ्नो टाउको निहुराउने ?

[3]अर्थात् जुन कुरो उसलाई राम्रो लाग्यो, त्यसलाई आफ्नो धर्म एवं नियम बनायो, के यस्तालाई तिमी मार्गमा ल्याउन सक्दछौ अथवा अल्लाहको यातनाबाट मुक्त गराउन सक्छौ ?

"के त्यो व्यक्ति जसको लागि त्यसको कुकर्म शोभनीय छ, त त्यो त्यसलाई राम्रो ठान्दछ, अतः अल्लाह तआला जसलाई चाहन्छ विचलित पार्दछ तथा जसलाई चाहन्छ मार्ग देखाउँछ । अतः तिमी त्यसमा लज्जित तथा दुखी न होउ ।" (सूरः फ़ातिर-८)

आदरणीय इब्ने अब्बास यसको व्याख्या यसप्रकार गर्नुहुन्छ । अज्ञान कालमा व्यक्तिले एउटा लामो अवधिसम्म एउटा सेतो ढुङ्गाको पूजा गर्ने गर्दथ्यो, जब त्यसलाई कुनै राम्रो पत्थर देखिन्थ्यो त त्यसले प्रथम पत्थरलाई छाडि अर्को पत्थरको पूजा प्रारम्भ गरिदिन्थ्यो । (इब्ने क़सीर) अर्थ यो हो कि यस्ता व्यक्ति, जो बुद्धि एवं समझले यसप्रकार शून्य तथा मात्र आफ्ना मनका इच्छालाई आफ्ना देवता बनाएका छन् । हे पैगम्बर ! के तिमी उनलाई प्रकाशको मार्गमा लगाउन सक्छौ ? अर्थात् लगाउन सक्दैनौ ।

أَمْ تَحْسَبُ أَنَّ أَكْثَرَهُمْ يَسْمَعُونَ أَوْ يَعْقِلُونَ ۚ إِنْ هُمْ إِلَّا كَالْأَنْعَامِ ۖ بَلْ هُمْ أَضَلُّ سَبِيلًا ﴿٤٤﴾

(४४) के तपाईं यो सोच्नु हुन्छ कि उनीहरुमध्ये धेरैले सुन्दैनन् अथवा बुझ्दैनन् । उनीहरु त पशु समान छन् बरु तिनीहरु भन्दा पनि अधिक पथ-भ्रष्ट ।[1]

أَلَمْ تَرَ إِلَىٰ رَبِّكَ كَيْفَ مَدَّ الظِّلَّ وَلَوْ شَاءَ لَجَعَلَهُ سَاكِنًا ثُمَّ جَعَلْنَا الشَّمْسَ عَلَيْهِ دَلِيلًا ﴿٤٥﴾

(४५) के तपाईंले हेर्नु भएन कि तपाईंको प्रभुले छायाँलाई कसरी विस्तृत गरिदिएको छ ?[2] यदि चाहेको भए त्यसलाई स्थिर नै गरिदिन्थ्यो,[3] अनि हामीले सूर्यलाई त्यसको पथ प्रदर्शक बनायौं ।[4]

ثُمَّ قَبَضْنَاهُ إِلَيْنَا قَبْضًا يَسِيرًا ﴿٤٦﴾

(४६) फेरि हामीले त्यसलाई विस्तारै आफूतिर तान्यौं ।[5]

وَهُوَ الَّذِي جَعَلَ لَكُمُ اللَّيْلَ لِبَاسًا

(४७) तथा त्यही हो जसले रातिलाई तिम्रो

[1]अर्थात् यी पशु जुन उद्देश्यले सृष्टि गरिएका हुन्, त्यसलाई तिनीहरु बुझ्दछन् । परन्तु मनुष्य जसलाई एक अल्लाहको पूजाका लागि सृष्टि गरिएको थियो, त्यसले रसूलहरुद्वारा सतर्क गराए पश्चात अल्लाहसित शिर्क गर्दछ तथा दैलो-दैलोमा नतमस्तक हुन्छ । यसै आधारमा यिनीहरु चौपाया (पशुहरु) भन्दा पनि नराम्रा तथा पथ-विचलित छन् ।

[2]यहाँदेखि पुनः एकेश्वरवादका तर्कहरुको प्रारम्भ हुन्छ । हेर, अल्लाह तआलाले जगतमा कसरी छायाँ फैलाएको छ, जुन प्रातःकाल पश्चात देखि सूर्योदयसम्म रहन्छ । अर्थात् त्यस बेला घाम हुँदैन । घामका साथ यो पछि यो खुम्चिन प्रारम्भ हुन्छ ।

[3]अर्थात् सदैव छायाँ नै रहन्छ, सूर्यको घामले छायाँलाई समाप्त गर्दैन ।

[4]अर्थात् घामबाट नै छायाँको पत्ता लाग्दछ कि प्रत्येक वस्तु आफ्नो विपरीतबाट जानिन्छ, यदि घाम नभएको भए मानिसहरु छायाँसित परिचित हुँदैनथे ।

[5]अर्थात् त्यो छायाँ विस्तारै हामीले आफूतिर तान्दछौं तथा त्यसको स्थानमा रातिको गंभीर अन्धकार छाउँछ ।

وَالنَّوْمَ سُبَاتًا وَّجَعَلَ النَّهَارَ نُشُوْرًا ﴿٤٧﴾

लागि वस्त्र बनायो[1] तथा निंद्रा सुखमय पाऱ्यो[2] तथा दिनलाई जीवित उभिने समय ।[3]

وَهُوَ الَّذِيْٓ اَرْسَلَ الرِّيٰحَ بُشْرًۢا بَيْنَ يَدَيْ رَحْمَتِهٖ ۚ وَاَنْزَلْنَا مِنَ السَّمَاۗءِ مَاۗءً طَهُوْرًا ﴿٤٨﴾

(४८) तथा त्यही हो जसले रहमत (कृपा) को वर्षाबाट पूर्व शुभ-सूचना दिने वायुलाई पठाउँछ तथा हामी आकाशबाट पवित्र पानी वर्षाउँछौं ।[4]

لِّنُحْيِۦَ بِهٖ بَلْدَةً مَّيْتًا وَّنُسْقِيَهٗ مِمَّا خَلَقْنَآ اَنْعَامًا وَّاَنَاسِيَّ كَثِيْرًا ﴿٤٩﴾

(४९) ताकि त्यसद्वारा मृत नगरलाई जीवित गरिदेऔं तथा त्यसलाई हामी आफ्नो सृष्टिमध्ये धेरैजसो पशु तथा मनुष्यहरुलाई खुवाउँछौं ।

وَلَقَدْ صَرَّفْنٰهُ بَيْنَهُمْ لِيَذَّكَّرُوْا ۖ

(५०) तथा निःसन्देह हामीले त्यसलाई उनीहरुका बीच

[1]अर्थात् वस्त्र, जसरी वस्त्र मनुष्यको शरीरलाई ढाक्छ, त्यसरी नै रात्रि तिमीलाई आफ्नो अन्धकारमा ढाक्छ ।

[2] سُبَات को अर्थ 'काट्नु' हो । निंद्रा मनुष्यको शरीरलाई कर्मबाट रोक्छ, जसलाई सुख प्राप्त हुन्छ । केही ज्ञाताहरुका अनुसार سُبَات को अर्थ 'फैलनु' हो । निद्रामा पनि मनुष्य लामो हुन्छ, यसकारण उसलाई सुबात भनियो । (ऐसरुत्तफासीर तथा फ़तहुल क़दीर) ।

[3]अर्थात् निद्रा जुन मृत्युकी बहिनी हो, दिनमा मनुष्य निद्राबाट ब्यूँझि व्यवसायको निम्ति उभिन्छ । हदीसमा वर्णित छ कि नबी सल्लल्लाहु अलैहि वसल्लम प्रातः उठ्दाखेरि यो दुआ (प्रार्थना) पढ्नु हुन्थ्यो । الحمد لله الذي أحيانا بعد ما أماتنا وإليه النشور "सम्पूर्ण प्रशंसा त्यस अल्लाहका लागि छन् जसले हामीलाई मारे पश्चात जीवित गऱ्यो तथा उसतिर एकत्रित हुनुछ ।" (बुख़ारी, मिशकात किताबुद-दावात)

[4] طَهُور (अरवी भाषाका मात्राहरुमध्ये एउटा मात्रालाई फतह भनिन्छ जुन अक्षर 'तआ' माथि छ) 'फऊल' शब्दको भारमा छ अर्थात यस्तो वस्तु जसबाट पवित्रता अथवा शुद्धता प्राप्त गरिन्छ, । जस्तै वज़ूको पानीलाई وَضُوء तथा इन्धनलाई وَقُود भनिन्छ, यस अर्थमा पानी स्वयं पनि पवित्र तथा अरुहरुलाई पनि पवित्र गर्नेछ । हदीसमा पनि छ । إن الماء طهور لا ينجسه شيء "पानी पवित्र छ, त्यसलाई कुनै वस्तु पनि अपवित्र गर्न सक्दैन ।" (अबू दाऊद, तिर्मिजी संख्या ६६ निसाई तथा इब्ने माजा) परन्तु यदि त्यसको रङ्ग, गन्ध तथा स्वादमध्ये कुनैमा परिवर्तन हुन्छ भने यस्तो पानी अपवित्र छ । जस्तो कि हदीसमा छ ।

فَأَبَىٰٓ أَكْثَرُ ٱلنَّاسِ إِلَّا كُفُورًا ۝٥٠

विभिन्न प्रकारले वर्णन गऱ्यौं ताकि[1] उनीहरु शिक्षा प्राप्त गरुन्, परन्तु तैपनि अधिकतर मानिसहरुले इन्कार तथा कृतघ्नताका अतिरिक्त अर्को कुरा अपनाउन इन्कार गरे।[2]

وَلَوْ شِئْنَا لَبَعَثْنَا فِى كُلِّ قَرْيَةٍ نَّذِيرًا ۝٥١

(५१) यदि हामीले चाहेको भए प्रत्येक वस्तीमा एउटा तर्साउने व्यक्ति (चेतावनी दिने) पठाइदिने थियौं।[3]

فَلَا تُطِعِ ٱلْكَـٰفِرِينَ وَجَـٰهِدْهُم بِهِۦ جِهَادًا كَبِيرًا ۝٥٢

(५२) अतः काफ़िरहरुको भनाइ नमान्नुस् तथा कुर्आनद्वारा उनीहरुसित पूर्ण शक्तिले महायुद्ध गर्नुस्।[4]

وَهُوَ ٱلَّذِى مَرَجَ ٱلْبَحْرَيْنِ هَـٰذَا عَذْبٌ فُرَاتٌ وَهَـٰذَا مِلْحٌ أُجَاجٌ وَجَعَلَ

(५३) तथा त्यही हो जसले दुईटा समुद्रलाई आपसमा जोडेको छ यो हो मिठो स्वादिष्ट

---

[1]अर्थात् कुर्आन करीमलाई। तथा केही विद्वानहरुले صرفناه मा अन्तिम सर्वनामलाई वर्षातिर फर्काएका छन् जसको अर्थ यो हुन्छ कि वर्षालाई हामीले परिवर्तन गरी बर्षाउँछौं। अर्थात् कहिले एक क्षेत्रमा कहिले अन्य क्षेत्रमा। यहाँसम्मकि कैयन् पटक यस्तो हुन्छ कि कहिले एक नगरको एक भागमा वर्षा हुन्छ तथा अन्य भागहरुमा हुँदैन तथा कहिले अन्य भागहरुमा हुन्छ। प्रथम भागमा हुँदैन यो अल्लाहको ज्ञान तथा विवेक हो। त्यो जुनप्रकार चाहन्छ, कहीं वर्षा गराउँछ तथा कहीं गराउँदैन तथा कहिले कुनै क्षेत्रमा एवं कहिले कुनै अन्य क्षेत्रमा।

[2]तथा एउटा कुफ्र एवं कृतघ्नता यो पनि हो कि वर्षालाई अल्लाहको कारीगरीको सट्टा नक्षत्रहरुको चालको परिणाम भनियोस्, जस्तो अशिक्षित मानिसहरुले भन्ने गर्दथे।

[3]परन्तु हामीले यस्तो गरेनौं तथा मात्र तपाईंलाई नै सबै वस्तीहरु बरु समस्त मनुष्य जातिका लागि सचेत गराउने बनाएर पठायौं।

[4]جاهدهم به मा अक्षर ها को संकेत कुर्आन हो अर्थात यस कुर्आनकाद्वारा धर्मयुद्ध गर्नुस्, यो आयत मक्कामा अवतरित भएको हो, अझै धर्मयुद्धको आदेश भएको थिएन। यसकारण अर्थ यो भयो कि कुर्आनका आदेश तथा निषेधलाई प्रष्टरुपले वर्णन गर्नुस् तथा काफ़िरहरुका लागि जुन झपार र हप्काइ आएका छन्, त्यो स्पष्ट गर्नुस्।

بَيْنَهُمَا بَرْزَخًا وَحِجْرًا مَّحْجُورًا ﴿٥٣﴾

तथा यो नूनिलो र टर्रो,[1] तथा यी दुबैका मध्य एउटा पर्दा एवं एउटा पृथक छेक (पर्दा) पारिदिएको छ ।[2]

وَهُوَ الَّذِي خَلَقَ مِنَ الْمَاءِ بَشَرًا فَجَعَلَهُ نَسَبًا وَصِهْرًا ۗ وَكَانَ رَبُّكَ

(५४) तथा त्यो त्यही हो जसले पानीबाट मनुष्यलाई सृष्टि गऱ्यो, अनि त्यसलाई वंश भएको तथा ससुराली सम्बन्धहरु भएको बनायो ।[3]

---

[1]मिठो पानीलाई فُرات भन्दछन्, فُرات को अर्थ हो काटिदिनु, तोडिदिनु, मिठो पानी तिर्खालाई काट्दछ अर्थात् समाप्त गरिदिन्छ । أجاج अत्यन्त नूनिलो तथा टर्रो पानी ।

[2]जुन एक-अर्कालाई मिल्न दिंदैन । केही व्याख्याकारहरुले ﴿حِجْرًا مَّحْجُورًا﴾ को अर्थ लिएका حراما محرما छन् यिनीमाथि अवैध गरियो कि स्वादिष्ट पानी नूनिलो अथवा टर्रो पानी मिठो होस् तथा केही व्याख्याकारहरुले مرج البحرين को अनुवाद गरेका छन् خلق المائين कि दुई थरी पानी बगाए, एउटा मिठो, दोस्रो खारो (स्वादरहित) । मिठो पानी त्यो हो जुन नदी, स्रोत तथा इनारहरुका रुपमा आवादीहरुका मध्य पाइन्छ, जसलाई मनुष्य आफ्नो दैनिक जीवनमा प्रयोग गर्दछ तथा खरो (स्वादरहित) पानी त्यो हो जुन पूर्वदेखि पश्चिमसम्म समुद्रमा फैलिएको छ, जुन भनिन्छ कि त्यो धर्तीको तीन चौथाइ भाग हो तथा एक चौथाइ भाग स्थल हो, जसमाथि मनुष्य तथा जीवहरुको निवास छ । यी समुद्र स्थिर छन्, जबकि उनमा ज्वारभाटा आईरहन्छ तथा तीव्र एवं उच्च धाराहरु छन् । समुद्री पानीलाई नूनिलो राख्नुमा अल्लाहको एक सुनीति छ । मिठो पानी धेरैबेर स्थिर रहनाले खराब हुनजान्छ, त्यसको स्वाद, रङ्ग तथा गन्धमा परिवर्तन आइहाल्छ, नूनिलो पानी बिग्रदैन, न त्यसको स्वाद बदलन्छ, न रङ्ग तथा गन्ध । यदि यी स्थिर समुद्रहरुका पानी पनि मिठो भएको भए, त्यसमा दुर्गन्ध उत्पन्न हुनथाल्थ्यो जसबाट मनुष्य तथा पशुहरुलाई धर्तीमा रहन कठिन हुने थियो । त्यसमा मर्ने जनावरहरुको दुर्गन्ध त्यसलाई अझ बढाइदिन्थे । अल्लाहको सुनीति त यो हो कि हजारौं वर्षदेखि यी सुमद्र विद्यमान छन्, तथा यिनमा हजारौं जनावर मर्दछन् तथा तिनैमा सड्छन् तथा गल्छन् । परन्तु अल्लाहले त्यसमा यति नून राखिदिएको छ कि त्यसको पानीमा अलिकति पनि दुर्गन्ध उत्पन्न हुन दिंदैन । तिनीबाट उठ्ने वायु पनि ठीक हुन्छ तथा तिनको पानी पनि पवित्र छ, यहाँसम्मकि तिनमा मरेका जनावर पनि हलाल (मान्य) छन् । كما في الحديث (मुअत्ता इमाम मालिक, इब्ने माजा, अबू दाऊद, तिर्मिजी किताबुल तहारत, नसाई किताबुल माअ) (तफ़सीर इब्ने कसीर)

[3]वंशसित तात्पर्य ती सम्बन्ध हुन्, जुन माता-पिता तिरबाट हुन्छ, तथा صهر सित तात्पर्य निकट सम्बन्ध हुन् जुन विवाहका उपरान्त पत्नीको तर्फबाट हुन्छ, जसलाई हाम्रो समाजमा ससुरली सम्बन्ध भनिन्छ । यी दुबै सम्बन्धका विवरण आयत

قَدِيْرًا ۝٥٤

निःसन्देह तपाईंको प्रभु प्रत्येक कुरोमाथि सामर्थ्य राख्दछ ।

وَ يَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ مَا لَا يَنْفَعُهُمْ وَلَا يَضُرُّهُمْ ۗ وَكَانَ الْكَافِرُ عَلٰى رَبِّهٖ ظَهِيْرًا ۝٥٥

(५५) तथा यिनीहरु अल्लाहलाई छाडि तिनीहरुको पुजा गर्दछन्, जो न त उनीहरुलाई कुनै लाभ पुऱ्याउन सक्दछन् न कुनै हानि पुऱ्याउन सक्दछन्, काफ़िर त छन् नै आफ्ना प्रभुका विरुद्ध (शैतान) को सहायता गर्नेहरु ।

وَمَآ اَرْسَلْنٰكَ اِلَّا مُبَشِّرًا وَّ نَذِيْرًا ۝٥٦

(५६) तथा हामीले त तपाईंलाई शुभ-सूचना तथा डर (त्रासिक) सुनाउनेल (नबी) बनाएर पठाएका छौं ।

قُلْ مَآ اَسْئَلُكُمْ عَلَيْهِ مِنْ اَجْرٍ اِلَّا مَنْ شَآءَ اَنْ يَّتَّخِذَ اِلٰى رَبِّهٖ سَبِيْلًا ۝٥٧

(५७) भनिदिनुस् कि म (कुरआन पुऱ्याए बापत) तिमीसित कुनै पारिश्रमिक चाहँदिन यसबाहेक कि जो कोही चाहन्छ आफ्नो रबतिर लग्ने मार्ग अप्नाओस् ।[1]

وَتَوَكَّلْ عَلَى الْحَيِّ الَّذِيْ لَا يَمُوْتُ وَسَبِّحْ بِحَمْدِهٖ ۗ وَكَفٰى بِهٖ بِذُنُوْبِ عِبَادِهٖ خَبِيْرًا ۝٥٨

(५८) तथा त्यस अनन्त अल्लाह (तआला) मा पूर्ण विश्वास गर्नुस् जसलाई कहिल्यै मृत्यु छैन तथा त्यसको प्रशंसाका साथ पवित्रताको वर्णन गर्दैरहनु, त्यो आफ्ना भक्तहरुका पापहरुसित राम्ररी परिचित छ ।

الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ وَمَا بَيْنَهُمَا فِيْ سِتَّةِ اَيَّامٍ ثُمَّ اسْتَوٰى

(५९) त्यही हो जसले आकाशहरु तथा धर्ती एवं उनका मध्येका वस्तुहरुलाई ६ दिनमा सृष्टि

حرمت عليكم (सूर: अल-निसा-२३) तथा ﴿ وَلَا تَنْكِحُوْا مَا نَكَحَ اٰبَآؤُكُمْ ﴾ (सूर: अल-निसा-२२) मा वर्णन गरिएको छ । तथा एउटै स्त्रीबाट दुईटा दूध पिउनाले जुन सम्बन्ध हुन्छ, हदीसका अनुसार त्यो वंशीय सम्बन्धहरुमा सम्मिलित छ । जस्तो कि आदेश छ يحرم من الرضاع ما يحرم من النسب (अल-बुख़ारी संख्या २६४५ तथा मुस्लिम संख्या १०७०)

[1]अर्थात् यही मेरो पारिश्रमिक हो कि प्रभुको मार्ग अप्नाइहालूँ ।

عَلَى الْعَرْشِ ۚ الرَّحْمَٰنُ فَاسْأَلْ بِهِ خَبِيرًا ﴿٥٩﴾

गरिदियो, अनि सिंहासनमा विराजमान भयो, त्यो कृपालु छ, तपाईं त्यसको विषयमा कुनै जानकारसित सोधिहाल्नुस् ।

وَإِذَا قِيلَ لَهُمُ اسْجُدُوا لِلرَّحْمَٰنِ قَالُوا وَمَا الرَّحْمَٰنُ أَنَسْجُدُ لِمَا تَأْمُرُنَا وَزَادَهُمْ نُفُورًا ۩ ﴿٦٠﴾

(६०) तथा उनीहरुसित जहिले पनि भनिन्छ कि दयालुलाई ढोग (सजदा) गर, त उनीहरु भन्दछन् कि कृपालु हो के ? के हामी त्यसको सजदा गरौं जसको तिमी हामीलाई आदेश दिइराखेका छौ तथा (यस आमन्त्रणबाट) उनको घृणा झन् बढ्दछ ।[1]

تَبَارَكَ الَّذِي جَعَلَ فِي السَّمَاءِ بُرُوجًا وَجَعَلَ فِيهَا سِرَاجًا وَقَمَرًا مُّنِيرًا ﴿٦١﴾

(६१) अत्यन्त शुभ छ त्यो जसले आकाशमा बुर्ज (नक्षत्र) बनायो[2] तथा त्यसमा सूर्य बनायो, तथा प्रकाशित चन्द्रमा पनि ।

وَهُوَ الَّذِي جَعَلَ اللَّيْلَ وَالنَّهَارَ خِلْفَةً

(६२) तथा उसैले रात्रि तथा दिनलाई एक-अर्काका

---

[1] رحمان - رحيم अल्लाहको विशेषता तथा शुभ नामहरु मध्ये हुन्, परन्तु अशिक्षित मानिसहरु अल्लाहलाई यी नामहरुबाट जान्दैनथे जस्तो कि हुदैबियाको सन्धिका समय जब नबी सल्लल्लाहु अलैहि वसल्लमले सन्धिको प्रारम्भ بسم الله الرحمن الرحيم बाट लेखाउनु भयो त मक्काका मूर्तिपूजकहरुले भने, हामी रहमान तथा रहीमलाई जान्दैनौं । باسمك اللهم लेख । (सीरत इब्ने हिशाम भाग २ पृष्ठ ३१७ अधिक जानकारीका लागि हेर्नुस् सूरः बनी इस्राईल-११० तथा सूरः अल-राद-३०) यहाँ पनि उनी रहमानको नामबाट भड्किनु तथा सजदा गर्नुबाट मुख फर्काउने कुराको वर्णन छ ।

[2] بُروج वहुवचन हो برج को सलफको व्याख्यामा بُروج सित तात्पर्य ठूला-ठूला ग्रह (ताराहरु) लिएका छन् तथा यसै तात्पर्यबाट कथनको स्पष्ट अर्थ समझमा आउँछ । महिमावान छ त्यो अस्तित्व जसले आकाशमा ठूला-ठूला ग्रह बनायो तथा सूर्य एवं चन्द्रमा बनायो । पछिका व्याख्याकारहरुले ज्योतिषहरुका राशिहरु तात्पर्य लिएका छन् । तथा यी बाह्र राशि हुन् मेष, वृष, कुम्भ, कर्क, मकर, मिथुन, सिंह, तुला, मीन, धन, वृश्चिक तथा कन्या तथा सात ठूला ग्रहहरुका निवास छन् । जसका नाम हुन्, मंगल, शुक्र, बुध, चन्द्र, सूर्य बृहस्पति तथा शनि । यी ग्रह ती बुर्जहरुमा यसप्रकार वर्लन्छन्, जस्तै यिनी यिनका लागि भव्य महल हुन् । (ऐसरुत्तफ़ासीर)

لِّمَنۡ أَرَادَ أَن يَذَّكَّرَ أَوۡ أَرَادَ شُكُورٗا ٦٢

अर्कालाई पछ्याउने बनायो[1] त्यस व्यक्तिको शिक्षाका लागि जो शिक्षा ग्रहण गर्ने अथवा कृतज्ञता व्यक्त गर्ने विचार राख्दछ ।

وَعِبَادُ ٱلرَّحۡمَٰنِ ٱلَّذِينَ يَمۡشُونَ عَلَى ٱلۡأَرۡضِ هَوۡنٗا وَإِذَا خَاطَبَهُمُ ٱلۡجَٰهِلُونَ قَالُواْ سَلَٰمٗا ٦٣

(६३) तथा रहमान (दयालु) का सत्य भक्त ती हुन्, जो धर्तीमा नम्रताले हिंड्छन् तथा जब अशिक्षितहरु उनीसित कुरा गर्न थाल्छन्, त उनीहरु भनिदिन्छन् कि सलाम छ ।[2]

وَٱلَّذِينَ يَبِيتُونَ لِرَبِّهِمۡ سُجَّدٗا وَقِيَٰمٗا ٦٤

(६४) तथा जो आफ्ना प्रभुका समक्ष सजदामा र उभि रात व्यतीत गर्दछन् ।

وَٱلَّذِينَ يَقُولُونَ رَبَّنَا ٱصۡرِفۡ عَنَّا عَذَابَ جَهَنَّمَۖ إِنَّ عَذَابَهَا كَانَ غَرَامًا ٦٥

(६५) तथा जो यी प्रार्थना (विनय) गर्दछन् कि हे हाम्रा प्रभु ! हामीबाट नरकको यातना टाढा नै राख किनभने यातना टाँसिने खालको छ ।[3]

[1]अर्थात् रात्रि जान्छ, त दिन आउँछ तथा दिन आउँछ त रात्रि गइहाल्छ । दुवै एकै समयमा एकत्रित हुँदैनन्, यसका लाभ तथा कारण पुग्नुको आवश्यकता छैन । केही ज्ञाताहरुले خِلْفَة को अर्थ एक-अर्काका विरोधी गरेका छन् । अर्थात् रात्रि अन्धकारमय छ तथा दिन प्रकाशले परिपूर्ण ।

[2]सलाम सित तात्पर्य मुख फर्काउनु तथा विवादलाई छाडिदिनुसित छ । अर्थात् ईमान भएका मानिसहरु अशिक्षित व्यक्ति तथा बेकारको छलफल गर्नेहरुसित अल्झन्नन्, बरु यस्ता अवसरमा वास्ता गर्दैनन् तथा उनीहरुबाट पन्छिने प्रयास गर्दछन् तथा विना लाभका तर्क-वितर्क गर्दैनन् ।

[3]यसबाट ज्ञात भयो कि दयालु अल्लाहका भक्त ती हुन् जो एकातिर रातहरुमा जागेर अल्लाहको आराधना गर्दछन् तथा अर्कोतिर तर्सन्छन् पनि कि कहीं कुनै त्रुटि अथवा आलस्यका कारण अल्लाहको पकडमा नआऊन् यसकारण उनीहरु नरकको यातनाबाट छुट्कारा माँग्दछन् । अर्थात् अल्लाहको इबादत तथा आज्ञाकारितामा कुनै प्रकारको गर्भ तथा घमण्ड हुनुहुँदैन । यस भावलाई अन्य स्थानमा यसप्रकार वर्णन गरिएको छ ।

إِنَّهَا سَاءَتْ مُسْتَقَرًّا وَمُقَامًا ﴿٦٦﴾

(६६) निश्चय नै त्यो ठाउँ बस्ने दृष्टिले पनि नराम्रो छ तथा स्थानको दृष्टिले पनि ।

وَالَّذِينَ إِذَا أَنفَقُوا لَمْ يُسْرِفُوا وَلَمْ يَقْتُرُوا وَكَانَ بَيْنَ ذَٰلِكَ قَوَامًا ﴿٦٧﴾

(६७) तथा जो व्यय गर्ने समयमा पनि न त अपव्यय गर्दछन्, न कंजूसी (कृपण) बरु यी दुबैका बीचका मध्यम मार्ग हुन्छ ।[1]

وَالَّذِينَ لَا يَدْعُونَ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ وَلَا يَقْتُلُونَ النَّفْسَ الَّتِي حَرَّمَ اللَّهُ إِلَّا بِالْحَقِّ وَلَا يَزْنُونَ ۚ وَمَن يَفْعَلْ ذَٰلِكَ يَلْقَ أَثَامًا ﴿٦٨﴾

(६८) तथा जो अल्लाहसँग कुनै अन्य देवतालाई पुकारदैनन् तथा न नाहक कुनै जीवलाई जसको हत्या गर्नुलाई अल्लाहले हराम गरेको छ, हत्या गर्दछन्[2] न उनीहरु व्यभिचारी

﴿وَالَّذِينَ يُؤْتُونَ مَا آتَوا وَّقُلُوبُهُمْ وَجِلَةٌ أَنَّهُمْ إِلَىٰ رَبِّهِمْ رَاجِعُونَ﴾

"तथा ती मानिसहरु जो केही दिन्छन् तथा उनका हृदय भयभीत छन् कि उनी आफ्ना प्रभुतिर फर्कने छन् ।" (सूर अल-मोमिनून-६०)

भय यस कुराको मात्र होइन कि उनीहरु अल्लाहको दरबारमा उपस्थित हुनु छ, बरु त्यसको साथै यस कुराको पनि भय छ कि उनका दान-पुण्य स्वीकार हुन्छ अथवा हुन्न ? हदीसमा आयतको व्याख्याको सम्बन्धमा चर्चित छ कि आदरणीय आयशाले रसूल सल्लल्लाहु अलैहि वसल्लमसित यस आयतको विषयमा सोध्नुभयो कि के यसबाट तात्पर्य ती मानिसहरु हुन्, जो रक्सी पिउँछन् तथा चोरी गर्दछन् ? उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "होइन हे अबू बक्र कि पुत्री ! बरु यी त्यस्ता मानिसहरु हुन् जो ब्रत बस्दछन्, नमाज़ पढ्दछन् तथा दान गर्दछन्, परन्तु त्यसका उपरान्त तर्सन्छन् कि कहीं उनका अस्वीकृत यी कर्म नभइहालून् ।" (जामेअ तिर्मिजी किताबुल तफ़सीर सूर: अल-मोमिनून)

[1]अल्लाहको अवज्ञामा व्यय गर्नु, अपव्यय तथा अल्लाहको आज्ञा पालनमा व्यय नगर्नु कंजूसी तथा अल्लाहका आदेश एवं निर्देश अनुसार व्यय गर्नु, अल्लाहको मार्गमा सन्तुलन हो । (फ़तहुल क़दीर) यसैप्रकार आवश्यक व्यय एवं अनिश्चितमा मध्यम सीमाभन्दा बढ्नु पनि अपव्ययमा आउन सक्छ, यसकारण त्यहाँ पनि सावधानी एवं मध्य मार्ग अपनाउनु अति आवश्यक छ ।

[2]तथा हकका साथ हत्या गर्नुका तीन अवस्थाहरु छन् । इस्लामका पश्चात कोही पुन: कुफ़्रमा हिंडोस्, जसलाई 'इर्तेदाद' भन्दछन्, अथवा विवाहित भएर व्यभिचार गरोस् अथवा कसैको हत्या गरिदेओस् । यी तीनवटै परिस्थितिहरुमा हत्या गरिदिइने छ ।

हुन्छन्,[1] तथा जोसुकै यो कर्म गर्दछ, त्यसले कडा यातना भोग्नेछ ।

(६९) त्यसलाई क़ेयामतका दिन दोब्बर यातना दिइनेछ तथा त्यो अपमान तथा अनादरका साथ सधैं त्यसमा रहनेछ ।

يُضٰعَفْ لَهُ الْعَذَابُ يَوْمَ الْقِيٰمَةِ وَيَخْلُدْ فِيْهٖ مُهَانًا ﴿٦٩﴾

(७०) उनीहरुका अतिरिक्त जो क्षमा माँग्दछन् तथा ईमान स्थापित गर्दछन् तथा सत्कर्म गर्दछन्[2] यस्ता मानिसहरुका पापलाई अल्लाह (तआला) पुण्यमा बदलिदिन्छ ।[3] अल्लाह तआला अत्यन्त क्षमाशील दयालु छ ।

اِلَّا مَنْ تَابَ وَاٰمَنَ وَعَمِلَ عَمَلًا صَالِحًا فَاُولٰٓئِكَ يُبَدِّلُ اللّٰهُ سَيِّاٰتِهِمْ حَسَنٰتٍ ؕ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ﴿٧٠﴾

[1]हदीसमा वर्णित छ कि रसूलुल्लाहु सल्लल्लाहु अलैहि वसल्लमसित प्रश्न गरियो, कुनचाहिं पाप सबभन्दा ठूलो छ ? उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, यो हो कि तिमी अल्लाहसँग कसैलाई सम्मिलित गर्दछौ, जबकि वास्तवमा उसले तिमीलाई पैदा गऱ्यो । उसले सोध्यो कि त्यसका पश्चात कुनचाहिं ठूलो पाप हो ? भन्नुभयो, आफ्नो सन्तानको यस भयले हत्या गर्नु कि त्यसले तिमीसित खानेछ । उसले सोध्यो त्यसपछि कुनचाहिं ? उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि तिमी आफ्नो छिमेकीकी पत्नीसित व्यभिचार गर । अनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि यी कुराहरुको पुष्टि यस आयतबाट हुन्छ । त्यसपछि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यसै आयतको पाठ गर्नुभयो । (अल-बुख़ारी तफ़सीर सूर: अल-बकर: र मुस्लिम किताबुल ईमान, बाबु कौनिश्-शिर्के अकबहुज़ जूनूब)

[2]यसबाट ज्ञात भयो कि संसारमा शुद्ध मनले क्षमा माँग्नाले प्रत्येक पापबाट क्षमा प्राप्त हुनसक्छ, चाहे त्यो जति ठूलो होस् । तथा सूर: निसाको आयत १३ मा जुन ईमान भएकाको हत्याको दण्ड नरक भनिएको छ, त त्यो यस परिस्थितिमा हुनेछ जब हत्याराले शुद्ध मनले क्षमा नमाँगेको हुनेछ तथा क्षमा नमाँगेको अवस्थामा मृत्यु भएको होस् । अन्यथा हदीसमा छ कि सय मानिसहरुको हत्याराले पनि क्षमा माँग्यो त अल्लाहले त्यसलाई पनि क्षमा गरिदियो । (सहीह मुस्लिम किताबुत तौबा)

[3]यसको एउटा अर्थ त यो हो कि अल्लाह तआला त्यसको अवस्था बदलदिन्छ, इस्लाम धर्म स्वीकार गर्नुका पूर्व त्यसले नराम्रो कर्म गर्दथ्यो, अब केवल एक ईष्ट अल्लाहको इबादत गर्दछ, पहिले काफ़िरहरुका साथमा सम्मिलित भई मुसलमानहरुसित लड्थ्यो, अब मुसलमानहरुको तर्फबाट काफ़िरहरुसित लड्थ्यो, अब मुसलमानहरुको तर्फबाट काफ़िरहरुसित लड्छ, इत्यादि । दोस्रो अर्थ यो हो कि त्यसका दुष्कर्महरुलाई पुण्यमा

(७१) तथा जो व्यक्ति क्षमा माँगदछ तथा पुण्यका कार्य गर्दछ त त्यो वास्तवमा अल्लाह (तआला) तिर सत्य प्रवृत्ति (झुकाव) राख्दछ ।[1]

وَمَنْ تَابَ وَعَمِلَ صَالِحًا فَإِنَّهُ يَتُوبُ إِلَى اللَّهِ مَتَابًا ﴿٧١﴾

(७२) तथा जो मानिस असत्य गवाही (साक्ष्य) दिँदैन,[2] तथा जब उनी कुनै व्यर्थका निकटबाट गुज्रन्छन्, त श्रेष्ठताले गुज्रिहाल्छन् ।[3]

وَالَّذِينَ لَا يَشْهَدُونَ الزُّورَ وَإِذَا مَرُّوا بِاللَّغْوِ مَرُّوا كِرَامًا ﴿٧٢﴾

परिणत गरिदिन्छ । यसको पुष्टि हदीसबाट पनि हुन्छ । रसूल अल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "म त्यस व्यक्तिलाई जान्दछु जो सबभन्दा अन्त्यमा स्वर्गमा प्रवेश गर्नेछ तथा सबभन्दा अन्त्यमा नरकबाट निस्कने छ । यो त्यो व्यक्ति हुनेछ कि केयामतका दिन त्यसका स-साना पाप प्रस्तुत गरिनेछन् तथा ठूला-ठूला पाप एकातिर राखिनेछन् । उसित भनिनेछ कि तिमीले अमूक-अमूक दिन अमूक-अमूक कार्य गरेका थियौ ? त्यसले सकारात्मक उत्तर दिनेछ, अस्वीकार गर्ने त्यसमा शक्ति हुनेछैन । यसका अतिरिक्त त्यो यस कुराबाट पनि भयभीत हुनेछ कि अहिले त ठूला पाप पनि प्रस्तुत गरिनेछन् । यसैबीच उसित भनिनेछ कि जो तेर ा लागि प्रत्येक कुकर्मको लागि एउटा पुण्य छ । अल्लाहको दया देखेर त्यो भन्नेछ, कि अझै त मेरा धेरैजसो कर्म यस्ता छन् कि म तिनलाई यहाँ देख्दिन, यो वर्णन गरेर रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम हाँस्नुभयो, यहाँसम्मकि उहाँका दाँत प्रकट भइहाले ।"(सहीह मुस्लिम किताबुल ईमान, बाब अदना, अहलिल, जन्नते मंजिलतुन फीहा)

[1]पहिलो क्षमाको सम्बन्ध कुफ्र तथा शिर्क (अल्लाहको हक-अधिकारमा अरुलाई समावेश गर्नु) सित छ, यस क्षमाको सम्बन्ध अन्य कुकर्म तथा त्रुटिहरुसित छ ।

[2]زور (जूर) को अर्थ हो झूठ । प्रत्येक असत्य वस्तु पनि झूठ हो, यसकारण झूठा गवाही (साक्ष्य) देखि लिएर कुफ्र तथा शिर्क एवं हरेक प्रकारका गलत कुराहरु जस्तै खेलकूद, गाना, तथा अन्य व्यर्थ मूर्खतापूर्ण रीति-रिवाज यसैमा सम्मिलित छन् तथा अल्लाहको उपासना गर्नेहरुको यो पनि विशेषता हो कि उनीहरु कुनै पनि झूठमा तथा झूठा संघमा उपस्थित हुँदैन ।

[3]बेकार (व्यर्थ) प्रत्येक त्यो कुरा तथा कार्य हो जसमा धर्मानुसार कुनै लाभ नहोस् । अर्थात् यस्ता कार्य तथा कुरामा पनि उनीहरु भाग लिँदैनन् बरु शान्तिका साथ सम्मान सहित निस्केर जान्छन् ।

وَالَّذِينَ إِذَا ذُكِّرُوا بِآيَاتِ رَبِّهِمْ لَمْ يَخِرُّوا عَلَيْهَا صُمًّا وَعُمْيَانًا ﴿٧٣﴾

(७३) तथा जब उनीहरुलाई उनका प्रभु (का कथन र प्रवचन) का आयतहरु सुनाइन्छन्, त उनी अन्धा, बहिरा भई तिनीमाथि लड्दैन ।[1]

وَالَّذِينَ يَقُولُونَ رَبَّنَا هَبْ لَنَا مِنْ أَزْوَاجِنَا وَذُرِّيَّاتِنَا قُرَّةَ أَعْيُنٍ وَاجْعَلْنَا لِلْمُتَّقِينَ إِمَامًا ﴿٧٤﴾

(७४) तथा उनीहरु यो दुआ (विनय) गर्दछन् कि हे हाम्रा प्रभु ! तिमी हामीलाई हाम्रा पत्नी तथा सन्तानहरुबाट आँखालाई शीतलता प्रदान गर[2] तथा हामीलाई सदाचारीहरुका अगुवा बनाइदेउ ।[3]

أُولَٰئِكَ يُجْزَوْنَ الْغُرْفَةَ بِمَا صَبَرُوا وَيُلَقَّوْنَ فِيهَا تَحِيَّةً وَسَلَامًا ﴿٧٥﴾

(७५) यी नै त्यसता मानिसहरु हुन् जसलाई उनका धैर्य (सहन) का फलस्वरुप (स्वर्गका उच्च) स्थानहरु प्रदान गरिनेछन्, जहाँ उनीहरुलाई आशिर्वाद तथा सलाम पुऱ्याइनेछ ।

خَالِدِينَ فِيهَا ۚ حَسُنَتْ مُسْتَقَرًّا وَمُقَامًا ﴿٧٦﴾

(७६) यसमा उनीहरु सधैं रहनेछन्, त्यो निकै नै राम्रो ठाउँ एवं सुखद स्थान हो ।

قُلْ مَا يَعْبَأُ بِكُمْ رَبِّي لَوْلَا دُعَاؤُكُمْ ۖ فَقَدْ كَذَّبْتُمْ فَسَوْفَ يَكُونُ لِزَامًا ﴿٧٧﴾

(७७) भनिदिनुस् ! यदि तिम्रो विनम्र प्रार्थना नभएको भए मेरो प्रभुले तिम्रो कदापि चिन्ता गर्दैनथ्यो ।[4] किनकि तिमीहरुले झुठ्लायौ ।

[1]अर्थात् उनी तिनीबाट मुख फर्काउँदैनन् तथा विमुखता दर्शाउँदैनन्, मानौं उनी बहिरा हुन् कि सुन्दैनन् अथवा अन्धा हुन् कि देख्दैनन् । बरु उनीहरु ध्यान लगाएर सुन्छन् तथा कानको शोभा तथा प्राण यन्त्र बनाउँदछन् ।

[2]अर्थात् उनीहरुलाई आफ्नो आज्ञाकारी बनाउ तथा हाम्रो पनि आज्ञापालक, जसबाट हाम्रा आँखा शीतलता प्राप्त गरुन् ।

[3]अर्थात् यस्तो राम्रो नमूना कि पुण्यमा उनीहरु हाम्रा अनुगामी होऊन् ।

[4]दुआ तथा विन्तीको अर्थ अल्लाहलाई पुकार्नु तथा उसको इबादत (उपासना) गर्नु हो तथा अर्थ यो हो कि तिम्रो उत्पत्तिको उद्देश्य अल्लाहको इबादत हो । यदि यो हुँदैन भने अल्लाहको चिन्ता तिमीलाई हुनेछैन अर्थात् अल्लाहका सदनमा मुनष्यको मान-सम्मान त्यसबाट अल्लाहमा ईमान स्थापित गर्नु तथा उसको इबादत गर्नुका कारण नै हो ।

त्यसको दण्ड तिमीलाई टाँसिने खालको हुनेछ ।[१]

## सूरतुश्शुअरा-२६

سُورَةُ الشُّعَرَاءِ

सूरः शुअरा मक्कामा अवतरित भयो तथा यसमा दुई सय सत्ताईस आयत तथा एघार रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु तथा अपार दयालु छ ।

طسم ①

(१) ता.सीन.मीम.

تِلْكَ آيَاتُ الْكِتَابِ الْمُبِينِ ②

(२) यी आयतहरु ज्योर्तिमय किताबका हुन् ।

لَعَلَّكَ بَاخِعٌ نَّفْسَكَ أَلَّا يَكُونُوا مُؤْمِنِينَ ③

(३) उनीहरुद्वारा ईमान स्थापित नगरेमा शायद तपाईंले आफ्नो प्राण त्यागदिनु हुनेछ ।[२]

إِن نَّشَأْ نُنَزِّلْ عَلَيْهِم مِّنَ السَّمَاءِ آيَةً فَظَلَّتْ أَعْنَاقُهُمْ لَهَا خَاضِعِينَ ④

(४) यदि हामीले चाहेको भए उनीमाथि आकाशबाट कुनै यस्तो प्रतीक उतारिदिन्थ्यौं कि जसका समक्ष उनका गर्दनहरु झुक्थे ।[३]

---

[१]यसमा काफिरहरुलाई सम्बोधन छ कि तिमीले अल्लाहलाई झुठ्लाएछौ, त अब त्यसको दण्ड पनि अवश्य तिमीले भोग्नु पर्नेछ । अत: संसारमा यो दण्ड बद्रको पराजयका रुपमा उनीहरुलाई पुग्यो तथा परलोकको नरक्मा स्थाई यातना पनि उनीहरुले भोग्नु पर्नेछ ।

[२]नबी सल्लल्लाहु अलैहि वसल्लमलाई मानवसित जुन सहानुभूति र जुन शुभचिन्ता तथा उनका मार्गदर्शनका निम्ति जुन तडप थियो, यसमा त्यसको प्रदर्शन छ ।

[३]अर्थात् जसलाई नमानी तथा जसमाथि ईमान कायम नगरी कुनै उपाय हुँदैनथ्या ।

परन्तु यसप्रकार दबावको पक्ष सम्मिलित हुन जान्थ्यो, जबकि हामीले मनुष्यलाई इच्छा तथा मान्ने-नमान्ने कुराको स्वाधीनता प्रदान गरेका छौं, ताकि उसको परीक्षा लिन सकियोस् । यसकारण हामीले यस्तो निशानी (प्रतीक) पनि उतारेनौं कि जसबाट हाम्रो कानुन प्रभावित होस् । तथा केवल नबी, तथा रसूल पठाउने एवं किताबहरु (धर्मशास्त्र) उतार्नु नै ठीक सम्झ्यौं ।

وَمَا يَأْتِيهِم مِّن ذِكْرٍ مِّنَ الرَّحْمَٰنِ مُحْدَثٍ إِلَّا كَانُوا عَنْهُ مُعْرِضِينَ ⑤

(५) तथा उनी छेउ दयालुको तर्फबाट जुन पनि नयाँ शिक्षाहरु आउँछन्, यिनीहरु त्यसबाट मुख फर्काइहाल्छन् ।

فَقَدْ كَذَّبُوا فَسَيَأْتِيهِمْ أَنبَاءُ مَا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ⑥

(६) उनीहरुले झुठ्लाएका छन्, अब उनको पासमा शीघ्र नै त्यसका सूचनाहरु आइहाल्नेछन्, जो सँग उनीहरु उपहास गरि राखेका छन् ।[1]

أَوَلَمْ يَرَوْا إِلَى الْأَرْضِ كَمْ أَنبَتْنَا فِيهَا مِن كُلِّ زَوْجٍ كَرِيمٍ ⑦

(७) के उनीहरुले धर्तीतिर देखेनन् ? कि हामीले त्यसमा हरेक प्रकारका सुन्दर जोगी कति पैदा गरेका छौं ।[2]

إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ⑧

(८) निःसन्देह त्यसमा अवश्य प्रतीक छ,[3] तथा उनीहरुमध्ये अधिकतर ईमान (विश्वास) स्थापित गर्ने छैनन् ।[4]

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ⑨

(९) तथा तिम्रो प्रभु निःसन्देह त्यही नै प्रभावशाली

---

[1]अर्थात् झुठ्लाउनुका परिणाम स्वरुप हाम्रो प्रकोप निकट भविष्यमा उनीहरुलाई आफ्नो पकडमा लिइहाल्नेछ, जसलाई उनीहरु असम्भव ठानी उपहास गर्दछन् । यो प्रकोप संसारमा पनि सम्भव छ जस्तो कैयन् समुदाय नाश भए, अन्य अवस्थामा आखिरतमा त त्यसबाट कुनै अवस्थामा छुट्कारा हुनेछैन । ما كانوا به يَسْتَهْزِؤُن भनेन बरु ما كانوا عنه معرضين भन्यो । किनभने उपहास एक त मुख फर्काउनु एवं झुठ्लाउनुभन्दा पनि अधिक ठूलो अपराध हो । (फ़तहुल क़दीर)

[2]زَوْجٌ को अर्को अर्थ यहाँ भेद तथा प्रकार गरिएका छन् । अर्थात् प्रत्येक प्रकारका वस्तु पैदा गऱ्यो जुन उत्तम छन् अर्थात मनुष्यका लागि लाभकारी छन् अर्थात् अधिक मात्रामा छन् जुनप्रकार अन्न, फल, शुष्क फलहरु तथा जीव-जन्तु आदि छन् ।

[3]अर्थात् जब अल्लाह तआला मृत धर्तीबाट यी कुरा पैदा गर्न सक्दछ, त के त्यसले मनुष्यहरुलाई पुनः जीवित गर्न सक्दैन ।

[4]अर्थात् त्यसको महान सामर्थ्यलाई देख्नुका उपरान्त अधिकतर मानिसहरु अल्लाह तथा रसूललाई मात्र झुठ्लाउँदैन, विश्वास (ईमान) पनि गर्दैन ।

तथा कृपालु छ ।[1]

وَاِذْ نَادٰى رَبُّكَ مُوْسٰۤى اَنِ ائْتِ الْقَوْمَ الظّٰلِمِيْنَ ۙ﴿۱۰﴾

(१०) तथा जब तपाईंको प्रभुले मुसालाई पुकारे कि तिमी अत्याचारीहरुको पासमा जाउ ।[2]

قَوْمَ فِرْعَوْنَ ؕ اَلَا يَتَّقُوْنَ ﴿۱۱﴾

(११) फ़िरऔनका समुदायको पासमा, के उनीहरुले सदाचार गर्ने छैनन् ।

قَالَ رَبِّ اِنِّيْۤ اَخَافُ اَنْ يُّكَذِّبُوْنِ ؕ﴿۱۲﴾

(१२) मूसाले भने मेरो प्रभु ! मलाई न भय छ कि कहीं उनीहरुले मलाई झुठ्लाइनदेऊन ।

وَيَضِيْقُ صَدْرِيْ وَلَا يَنْطَلِقُ لِسَانِيْ فَاَرْسِلْ اِلٰى هٰرُوْنَ ﴿۱۳﴾

(१३) तथा मेरो छाती (हृदय) संकुचित भइर खेको छ,[3] मेरो जिब्रो चलिराखेको छैन,[4] अत: तिमी हारुनतिर पनि प्रकाशना (वह्‍य) पठाउ ।[5]

---

[1]अर्थात् प्रत्येक कुरोमाथि उसको प्रभुत्व तथा बदला लिनमा हरेक प्रकारको सामर्थ्य छ, परन्तु त्यो दयालु पनि छ यसकारण तुरुन्त पकड गर्दैन बरु पूरा अवसर दिन्छ तथा त्यसपछि पकड गर्दछ ।

[2]यो प्रभुको त्यस समयको पुकार हो जब आदरणीय मूसा मदयनबाट आफ्नी पत्नीका साथ फर्किराखेका थिए, मार्गमा उनलाई ताप्नको निम्ति अग्निको आवश्यकता प्रतीत भयो, त आगोको खोजीमा तूर पर्वतसम्म पुगिहाले, जहाँबाट आकाशवाणीले उनको स्वागत गर्‍यो तथा उनलाई नबूअतको पदबाट शुशोभित गरियो तथा अत्याचारीहरुसम्म अल्लाहका सन्देश पुर्‍याउने कर्तव्य उनलाई सुम्पियो ।

[3]यस भयले कि त्यो अत्यन्त क्रुर छ, मलाई झुठ्लाउने छ । यसबाट ज्ञात भयो कि प्राकृतिक भय नवीहरुलाई पनि हुनसक्छ ।

[4]यो संकेत हो यस कुरातिर कि आदरणीय मूसा अधिक धारा प्रभावमा कुरा गर्दैनथे । अथवा त्यसतिर कि जिभ्रोमाथि आगोको डल्लो राख्नुको कारण उच्चारणमा त्रुटि उत्पन्न भइहालेको थियो, जसलाई व्याख्याकारहरु वर्णित गर्छन् ।

[5]अर्थात् उनीतिर जिब्रीललाई प्रकाशना (वह्‍य) दिएर पठाउ तथा उनलाई पनि प्रकाशना तथा नबूअतबाट सुशोभित गरी मेरो सहायक बनाउ ।

وَلَهُمْ عَلَيَّ ذَنۢبٌ فَأَخَافُ أَن يَقْتُلُونِ ⑭

(१४) तथा उनीहरुले ममाथि मेरो एउटा त्रुटिको (दाबी) पनि छ, मलाई भय छ कि कहीं उनीहरुले मलाई मारिनहालून् ।[1]

قَالَ كَلَّا ۖ فَاذْهَبَا بِآيَاتِنَا ۖ إِنَّا مَعَكُم مُّسْتَمِعُونَ ⑮

(१५) अल्लाहले भन्यो कि कहिल्यै यस्तो हुनेछैन, तिमी दुबै हाम्रा निशानीहरु लिएर जाउ ।[2] हामी स्वयं सुन्ने तिम्रा साथमा छौं ।[3]

فَأْتِيَا فِرْعَوْنَ فَقُولَا إِنَّا رَسُولُ رَبِّ الْعَالَمِينَ ⑯

(१६) तिमी दुबै फ़िरऔनका पासमा गई भन कि नि:सन्देह हामी विश्वका पालनकर्ताद्वारा पठाइएका हौं ।

[1]यो संकेत हो त्यस हत्यातिर जुन आदरणीय मूसाबाट अज्ञानतामा भइहालेको थियो तथा मृतक 'क़िबती' अर्थात फ़िरऔनको जातिको थियो, यसकारण फ़िरऔन त्यसको प्रतिशोधमा आदरणीय मूसाको हत्या गरिदिन चाहन्थ्यो, जसको सूचना पाएर आदरणीय मूसा मिश्रबाट मदयन गइहालेका थिए । यो घटना भएको यद्यपि कैयन् वर्ष व्यतीत भइसकेका थिए, परन्तु फ़िरऔनको पासमा जानुमा वास्तवमा यसको सम्भावना थियो कि फ़िरऔनले उनलाई समाति यस अपराधका कारण हत्याको दण्ड दिन प्रयास गरोस् । यसकारण यो भय पनि निराधार थिएन ।

[2]अल्लाह तआलाले सान्त्वना दियो कि तिमी दुबै जाउ, मेरा सन्देश उसलाई पुऱ्याउ, तिमीलाई जुन सम्भावनाको भय छ त्यसबाट हामीले तिम्रो रक्षा गर्नेछौं । आयातबाट तात्पर्य तर्क एवं स्पष्ट निशानीहरु हुन् जसबाट प्रत्येक पैग़म्बरलाई परिचित गराइन्छ अथवा ती चमत्कार हुन् जुन आदरणीय मूसालाई दिइएका थिए, जस्तै हात ज्योतिर्मय हुनु तथा छडी ।

[3]अर्थात् तिमीले जे-जति भन्नेछौ तथा उत्तरमा त्यसले जे-जति भन्नेछ, हामी सुनिराखेका हुनेछौं । यसकारण आत्तिनुको कुनै आवश्कता छैन । हामीले तिमीलाई रिसालतको दायित्व दिएर निश्चिन्त हुने छैनौं । बरु हाम्रो सहायता तिम्रो साथ छ । साथ हुनुको अर्थ सहायता एवं समर्थन दिनु हो ।

أَنْ أَرْسِلْ مَعَنَا بَنِيٓ إِسْرَٰٓءِيلَ ﴿١٧﴾

(१७) कि तिमी हाम्रो साथमा इस्राईलका सन्तानलाई पठाइदेउ ।[1]

قَالَ أَلَمْ نُرَبِّكَ فِينَا وَلِيدًا وَلَبِثْتَ فِينَا مِنْ عُمُرِكَ سِنِينَ ﴿١٨﴾

(१८) (फ़िरऔनले) भन्यो कि के हामीले तिमीलाई तिम्रो बाल्यवस्थामा आफूकहाँ पोषण गरेका थिएनौं ?[2] तथा तिमीले आफ्नो आयुका धेरै वर्षहरु हामीमा व्यतीत गरेनौं ?[3]

وَفَعَلْتَ فَعْلَتَكَ ٱلَّتِى فَعَلْتَ وَأَنتَ مِنَ ٱلْكَٰفِرِينَ ﴿١٩﴾

(१९) तथा तिमीले आफ्नो त्यो काम गर्‍यौ, जुन गर्‍यौ तथा तिमी कृतघ्नमध्ये हौ ।[4]

قَالَ فَعَلْتُهَآ إِذًا وَأَنَا۠ مِنَ ٱلضَّآلِّينَ ﴿٢٠﴾

(२०) (आदरणीय मूसाले) उत्तर दिए कि मैले यस कार्यलाई त्यस समय गरेको थिएँ जबकि म मार्ग बिर्सिएका मध्ये थिएँ ।[5]

[1]अर्थात् एउटा कुरो यो भन कि हामी आफ्नो इच्छाले तिम्रो पासमा आएका होइनौं, बरु सर्वलोकको प्रभुका प्रतिनिधि तथा त्यसका रसूलका रुपमा आएका हौं तथा अर्को कुरा यो हो कि तिमीले (चार सय वर्षदेखि) इस्राईलका सन्तानलाई दास बनाएर राखेका छौ, उनीहरुलाई स्वतन्त्र गरिदेउ, ताकि म उनीहरुलाई सीरियाको धर्तीमा लिएर जाउँ जसको अल्लाहले उनीहरुसित वाचा गरेको छ ।

[2]फ़िरऔनले आदरणीय मूसाको आमन्त्रण एवं माँगमाथि विचार गर्नुको सट्टा, उनको अपमान तथा अनादर गर्न प्रारम्भ गरिदियो तथा भने कि के तिमी त्यही हौ जो हाम्रो काखमा तथा हाम्रो घरमा पालित-पोषित भयो, जबकि हामीले इस्राईलका सन्तानका बालकहरुको हत्या गरिदिन्थ्यौं ।

[3]केही विद्वानहरु भन्छन् कि अठार वर्ष फ़िरऔनको भवनमा व्यतीत गरे, केही ज्ञाताहरुका निकट तीस तथा केहीका निकट चालीस वर्ष । अर्थात् यति आयु व्यतीत गर्नुका पश्चात, केही वर्ष यताउता रही अब तिमी नबूअतको दावा गर्न लागेका छौ ?

[4]अनि हाम्रै खाएर हाम्रै जातिको एक व्यक्तिको हत्या गरी हाम्रो कृतघ्नता व्यक्त गर्‍यो ।

[5]अर्थात् त्यो हत्याको प्रयास थिएन बरु एक घूसा नै थियो, जुन उसलाई हानेका थिए, जसबाट उसको मृत्यु भइहाल्यो । यसका अतिरिक्त यो घटना पनि नबूअत भन्दा पूर्वको हो, जबकि मलाई ज्ञानको यो प्रकाश दिइएको थिएन ।

فَفَرَرْتُ مِنكُمْ لَمَّا خِفْتُكُمْ فَوَهَبَ لِي رَبِّي حُكْمًا وَجَعَلَنِي مِنَ الْمُرْسَلِينَ ﴿٢١﴾

(२१) अनि जब मलाई तिम्रो भय भयो त म तिमीकहाँबाट भागिहालें अनि मलाई मेरो प्रभुले आदेश तथा ज्ञान प्रदान गऱ्यो तथा मलाई आफ्ना पैग़म्बरहरुमा सम्मिलित गरिदिए ।[1]

وَتِلْكَ نِعْمَةٌ تَمُنُّهَا عَلَيَّ أَنْ عَبَّدتَّ بَنِي إِسْرَائِيلَ ﴿٢٢﴾

(२२) तथा ममाथि के तिम्रो यही त्यो उपकार हो जसलाई तिमी प्रदर्शित गरिराखेका छौ कि तिमीले इस्राईलका सन्तानलाई दास बनाएका छौ ।[2]

قَالَ فِرْعَوْنُ وَمَا رَبُّ الْعَالَمِينَ ﴿٢٣﴾

(२३) फ़िरऔनले भन्यो समस्त विश्वको प्रभु के हो ?[3]

قَالَ رَبُّ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا إِن كُنتُم مُّوقِنِينَ ﴿٢٤﴾

(२४) (आदरणीय मूसाले) भने कि त्यो आकाशहरु तथा धर्ती एवं उनका मध्य भएका सबै कुराको प्रभु हो, यदि तिमी विश्वास गर्ने हौ भने ।

قَالَ لِمَنْ حَوْلَهُ أَلَا تَسْتَمِعُونَ ﴿٢٥﴾

(२५) (फ़िरऔनले) आफ्ना निकटवर्तीहरुसित

[1]अर्थात् पहिला जे-जति भयो, त्यो आफ्नो ठाउँमा, परन्तु अब म अल्लाहको रसूल हूँ, यदि मेरो अनुकरण गर्नेछौ भने बाँचिहाल्नेछौ अन्य परिस्थितिहरुमा विनाश तिम्रो भाग्यमा लेखिसकिएको छ ।

[2]अर्थात् यो राम्रो उपकार हो जो तिमी मलाई जताइराखेका छौ कि मलाई निःसन्देह दास बनाएनौं तथा स्वतन्त्र छाड्यौ, परन्तु मेरा सम्पूर्ण समुदायलाई दास बनाएर राखेका छौ । यस महाअत्याचारका सापेक्ष यस उपकारको के महत्व छ ?

[3]यो त्यसले प्रश्न सोधेको होइन, बरु गर्भको प्रदर्शन तथा अस्वीकृत रुपमा भन्यो किनकि उसको दावा त यो थियो ।

﴿مَا عَلِمْتُ لَكُم مِّنْ إِلَٰهٍ غَيْرِي﴾

"म आफू अतिरिक्त तिम्रो लागि कुनै अन्य देवता जान्दै जान्दिन ।" (सूर: अल-कसस-३८)

भन्यो कि के तिमी सुन्दैनौ ?[1]

قَالَ رَبُّكُمْ وَرَبُّ اٰبَآئِكُمُ الْاَوَّلِيْنَ ﴿٢٦﴾

(२६) (आदरणीय मूसाले) भने त्यो तिम्रो तथा तिम्रा पूर्वजहरुको प्रभु हो ।

قَالَ اِنَّ رَسُوْلَكُمُ الَّذِيْٓ اُرْسِلَ اِلَيْكُمْ لَمَجْنُوْنٌ ﴿٢٧﴾

(२७) (फ़िरऔनले) भन्यो (मानिसहरु) ! तिम्रो यो रसूल जो तिमीहरुतिर पठाइएको छ, त्यो त निश्चित नै दिवाना (पागल) छ ।

قَالَ رَبُّ الْمَشْرِقِ وَالْمَغْرِبِ وَمَا بَيْنَهُمَا ۭ اِنْ كُنْتُمْ تَعْقِلُوْنَ ﴿٢٨﴾

(२८) (आदरणीय मूसाले) भने त्यही पुर्व तथा पश्चिमको तथा उनका मध्य भएका सबै कुराको प्रभु हो,[2] यदि तिमी केही बुद्धि भएका हौ भने ।

قَالَ لَىِٕنِ اتَّخَذْتَ اِلٰهًا غَيْرِيْ لَاَجْعَلَنَّكَ مِنَ الْمَسْجُوْنِيْنَ ﴿٢٩﴾

(२९) (फ़िरऔन) भन्नथाल्यो (सुनिहाल) यदि तिमीले म बाहेक कसैलाई पूज्य बनायौ भने मैले तिमीलाई बन्दीहरुमध्ये राखिदिनेछु ।[3]

قَالَ اَوَلَوْ جِئْتُكَ بِشَيْءٍ مُّبِيْنٍ ﴿٣٠﴾

(३०) (मूसाले) भने चाहे म तिम्रो पासमा कुनै प्रत्यक्ष वस्तु ल्याइदिऊँ तैपनि ?[4]

---

[1]अर्थात् के तिमीहरु यसको कुरामा आश्चर्य चकित हुँदैनौ कि म बाहेक पनि अन्य कोही पूज्य छ ।

[2]अर्थात् जसले पूर्वलाई पूर्व बनायो, जसबाट ताराहरु उदय हुन्छन् तथा पश्चिमलाई पश्चिम बनाए जसमा ताराहरु अस्त हुन्छन् । यसप्रकार उनका बीच जे-जति छ, तिनका प्रभु तथा तिनका प्रबन्ध गर्ने पनि त्यही हो ।

[3]फ़िरऔनले जब देख्यो कि मूसा अलैहिस्सलाम विभिन्न प्रकारले सर्वलोकका प्रभुको पूर्ण प्रभुत्वको स्पष्टीकरण गरिराखेका छन् जसको कुनै उचित उत्तर त्यसबाट बनिराखेको छैन, त उसले तर्कहरुलाई छाडि धम्की दिन प्रारम्भ गरिदियो तथा मूसालाई जेलमा थुनिदिने कुरोबाट तर्सायो ।

[4]अर्थात् यस्तो कुनै वस्तु अथवा चमत्कार जसबाट यो स्पष्ट होस् कि म सच्चा तथा वास्तविक रुपमा अल्लाहको रसूल हूँ तैपनि तिमीले मेरो सत्यतालाई स्वीकार गर्ने छैन ?

قَالَ فَأْتِ بِهِۦٓ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ﴿٣١﴾

(३१) फ़िरऔनले) भन्यो यदि तिमी सत्यवादीहरुमध्ये हौ भने त्यसलाई प्रस्तुत गर ।

فَأَلْقَىٰ عَصَاهُ فَإِذَا هِيَ ثُعْبَانٌ مُّبِينٌ ﴿٣٢﴾

(३२) तपाईंले (त्यतिखेरै) आफ्नो लठ्ठी बजार्नुभयो जो एक्कासि खुल्लम-खुल्ला (निकै ठूलो) अजिंगर बनिहाले ।[1]

وَنَزَعَ يَدَهُۥ فَإِذَا هِيَ بَيْضَآءُ لِلنَّٰظِرِينَ ﴿٣٣﴾

(३३) तथा आफ्ना हात तन्काएर निकाल्नु भयो त त्यो पनि त्यसैबेला प्रत्येक देख्नेलाई उज्जवल प्रकाश भएको देखिन थाले ।[2]

قَالَ لِلْمَلَإِ حَوْلَهُۥٓ إِنَّ هَٰذَا لَسَٰحِرٌ عَلِيمٌ ﴿٣٤﴾

(३४) (फ़िरऔन) आफ्ना निकटवर्ती नाइकेहरुसित भन्यो कि यो त कुनै निकै ठूलो दक्ष जादूगर हो ।[3]

يُرِيدُ أَن يُخْرِجَكُم مِّنْ أَرْضِكُم بِسِحْرِهِۦ فَمَاذَا تَأْمُرُونَ ﴿٣٥﴾

(३५) यो त चाहन्छ कि आफ्नो जादूको शक्तिले तिमीहरुलाई तिम्रा धर्तीबाट निष्काशित गरिदेओस्, भन अब तिमी के सुझाव दिन्छौ ?[4]

---

[1]कतिपय ठाउँहरुमा ثُعْبَان (सर्प) लाई حَيَّة (नाग) तथा कतिपय ठाउँहरुमा جَانّ भनिएको छ । ثُعبان त्यो सर्प हुन्छ जुन ठूलो तथा جَانّ सानो सर्पलाई भन्छन् तथा حَيَّة साना-ठूला दुवै प्रकारका सर्पलाई भनिन्छ । (फ़तहुल क़दीर) अर्थात् यो चमत्कार दिंदाखेरि छडीले पहिला सर्पको रुप धारण गऱ्यो अनि हेर्दा-हेर्दै अजिंगर बनिहाल्यो । والله أعلم

[2]अर्थात् खल्तीबाट हात झिके त त्यो चन्द्रमाको टुक्रा जस्तै चम्कन्थ्यो । यो दोस्रो चमत्कार मूसाले प्रस्तुत गरे ।

[3]फ़िरऔनले यसको साटो कि यी चमत्कारहरुलाई देखेर, आदरणीय मूसाको पुष्टि गर्दथ्यो तथा ईमान ल्याउँदथ्यो, त्यसले झुठ्लाउने तथा द्वेषको मार्ग अपनायो तथा आदरणीय मूसाको विषयमा भन्यो कि यो कुनै दक्ष जादूगर हो ।

[4]अनि आफ्नो सम्प्रदायलाई झन् अधिक भड्काउनको लागि भन्यो कि त्यो यी जादूद्वारा तिमीहरुलाई यहाँबाट निकालेर स्वयं यसमाथि अधिकतर गर्न चाहन्छ । अब भन ! तिम्रो के विचार छ ? अर्थात् यससँग के व्यवहार गरियोस् ।

قَالُوٓا۟ أَرْجِهْ وَأَخَاهُ وَٱبْعَثْ فِى ٱلْمَدَآئِنِ حَـٰشِرِينَ ﴿٣٦﴾

(३६) ती सबैले भने तपाईं यसलाई तथा यसको भाइलाई स्थगित गर्नुस् तथा सबै नगरहरुमा एकत्रित गर्नेहरुलाई पठाइदिनुस् ।

يَأْتُوكَ بِكُلِّ سَحَّارٍ عَلِيمٍ ﴿٣٧﴾

(३७) ताकि तपाईंको पासमा जुन दक्ष जादूगरहरु छन्, तिनीहरुलाई ल्याऊन् ।[1]

فَجُمِعَ ٱلسَّحَرَةُ لِمِيقَـٰتِ يَوْمٍ مَّعْلُومٍ ﴿٣٨﴾

(३८) अनि एउटा निश्चित दिनको निश्चित समयमा सबै जादूगरहरु एकत्रित गरियून् ।[2]

وَقِيلَ لِلنَّاسِ هَلْ أَنتُم

(३९) तथा जनमानससित पनि भनियो

[1]अर्थात् यी दुबैलाई हाललाई यिनकै अवस्थामा छाडिदेउ, तथा सबै नगरहरुबाट जादूगर एकत्रित गरी उनीहरुमा प्रतियोगिता गराइयोस् ताकि तिनका जादूको उत्तर तथा तिम्रो समर्थन एवं विजय भइहालोस् । तथा यो अल्लाहतिरबाटै आफ्नो योजना थियो ताकि मानिसहरु एकै स्थानमा एकत्रित होऊन् तथा यी निशानी तथा चमत्कारहरुको प्रत्यक्ष स्वयं दर्शन गरुन् जुन अल्लाह तआ़लाले आदरणीय मूसालाई प्रदान गरेको थियो ।

[2]अत: जादूगरहरुको एउटा ठूलो संख्या मिश्र तथा त्यसका निकटवर्ती क्षेत्रहरुबाट एकत्रित गरियो, उनीहरुको संख्या बाह्र हजार, सत्र हजार, तीस हजार, तथा अस्सी हजार (विभिन्न कथनानुसार) भनिन्छ । वास्तविक संख्या अल्लाह नै उचित रुपमा जान्दछ । किनभने कुनै प्रमाणित कथनमा संख्याको वर्णन छैन । यसको विस्तृत वर्णन सूर: आराफ, सूर: ताहामा पनि गुज्रिसकेको छ । अर्थात् फ़िरऔनको सम्प्रदाय किब्त, ले त अल्लाहको दिव्य ज्योतिलाई आफ्ना मुखले निभाउन चाहेका थिए, पर न्तु अल्लाह तआ़ला आफ्नो दिव्य ज्योतिलाई पूर्ण गर्न चाहन्थ्यो । अत: कुफ़्र तथा ईमानको संघर्षमा सधैं यस्तै हुँदै आएको छ कि जुनबेला पूर्ण तत्परताका साथ ईमानको मुकाबिलामा आउँछ त ईमानलाई अल्लाह तआ़ला सम्मानित तथा प्रभावशाली पार्दछ । जस्तो कि अल्लाहको आदेश छ:

﴿ بَلْ نَقْذِفُ بِٱلْحَقِّ عَلَى ٱلْبَـٰطِلِ فَيَدْمَغُهُۥ فَإِذَا هُوَ زَاهِقٌ ﴾

"बरु हामी सत्यबाट असत्यमाथि तीब्र प्रहार गर्दछौं, अत: त्यसले उसको टाउको फुटालिदिन्छ तथा असत्य त्यतिखेर समाप्त भएर जान्छ ।" (सूर: अल-अंबिया-१८)

مُّجْتَمِعُوْنَ ﴿٣٩﴾

कि तिमी पनि एकत्रित हुनेछौ ।[1]

لَعَلَّنَا نَتَّبِعُ السَّحَرَةَ اِنْ كَانُوْا هُمُ الْغٰلِبِيْنَ ﴿٤٠﴾

(४०) ताकि यदि जादूगरहरु प्रभावशाली हुन्छन् भने हामी उनीहरुकै अनुकरण गर्नेछौं ।

فَلَمَّا جَآءَ السَّحَرَةُ قَالُوْا لِفِرْعَوْنَ اَئِنَّ لَنَا لَاَجْرًا اِنْ كُنَّا نَحْنُ الْغٰلِبِيْنَ ﴿٤١﴾

(४१) अनि जब जादूगर आए त उनीहरुले फ़िरऔनसित भने कि यदि हामी विजयी भयौं भने के हामीलाई केही उपहार पनि प्राप्त हुनेछ ।

قَالَ نَعَمْ وَاِنَّكُمْ اِذًا لَّمِنَ الْمُقَرَّبِيْنَ ﴿٤٢﴾

(४२) (फ़िरऔनले) भन्यो, हो ! (अत्यन्त प्रसन्नताले) बरु यस्तो परिस्थितिमा तिमी मेरा विशेष दरबारिया बन्नेछौ ।

قَالَ لَهُمْ مُّوْسٰٓى اَلْقُوْا مَآ اَنْتُمْ مُّلْقُوْنَ ﴿٤٣﴾

(४३) (आदरणीय) मूसाले जादूगरहरुसित भने जे-जति तिमीहरुले गर्नुछ गर ।[2]

فَاَلْقَوْا حِبَالَهُمْ وَعِصِيَّهُمْ وَقَالُوْا بِعِزَّةِ فِرْعَوْنَ اِنَّا لَنَحْنُ الْغٰلِبُوْنَ ﴿٤٤﴾

(४४) उनीहरुले आफ्ना डोरी तथा लठ्ठी हाले तथा भन्नथाले फ़िरऔनको सम्मानको कसम हामी अवश्य विजयी हुनेछौं ।[3]

---

[1]अर्थात् जनतालाई पनि सावधान गरिदैछ कि तिमीहरुलाई पनि यो प्रतियोगिता हेर्न अवश्य उपस्थित हुनुछ ।

[2]आदरणीय मूसातिरबाट जादूगरहरुलाई प्रथम आफ्ना खेल देखाउनका लागि भन्नुमा यो विशेषता ज्ञात हुन्छ कि प्रथम त उनीहरुलाई यो स्पष्ट होस् कि अल्लाहको पैग़म्बर यिनीहरुका यति ठूलो संख्या तथा उनका जादूई खेलहरुबाट अलिकति पनि भयभीत छैनन् । द्वितीय यो उद्देश्य पनि हुनसक्छ कि जब पछि अल्लाहको आदेशले यी सारा जादूई खेल एकै क्षणमा समाप्त भइहाल्नेछन् त दर्शकहरुमाथि राम्रा प्रभाव पर्नेछन् तथा शायद यसप्रकार अधिक मानिसहरु अल्लाहमा ईमान क़ायम गर्नेछन् । अतः यस्तै भयो, बरु जादूगर नै सर्वप्रथम ईमान कायम गरे जस्तो कि अगाडी वर्णन आइराखेको छ ।

[3]जस्तो कि सूरः अल-आराफ़ तथा सूरः ताहामा गुज्रिसकेको छ कि ती जादूगरहरुले आफ्ना विचारमा निकै ठूलो जादू प्रस्तुत गरेका थिए । ﴿ سَحَرُوْٓا اَعْيُنَ النَّاسِ وَاسْتَرْهَبُوْهُمْ وَجَآءُوْ بِسِحْرٍ عَظِيْمٍ ﴾ 'त मानिसहरुलाई त्यसको नजरबन्दी' (सूरः आराफ-११६)

فَأَلْقَىٰ مُوسَىٰ عَصَاهُ فَإِذَا هِيَ تَلْقَفُ مَا يَأْفِكُونَ ﴿٤٥﴾

(४५) अब (आदरणीय) मूसाले पनि आफ्नो लठ्ठी हाले, जसले त्यतिखेरै उनका असत्यले रचेका खेललाई निल्न प्रारम्भ गरिदिए ।

فَأُلْقِيَ السَّحَرَةُ سَاجِدِينَ ﴿٤٦﴾

(४६) यो हेर्नासाथ जादूगरहरु सजदा (नतमस्तक) गरे ।

قَالُوا آمَنَّا بِرَبِّ الْعَالَمِينَ ﴿٤٧﴾

(४७) तथा उनीहरुले स्पष्ट रुपमा भनिहाले कि हामी त समस्त लोकको प्रभुमा ईमान सुदृढ गर्‍यौं ।

رَبِّ مُوسَىٰ وَهَارُونَ ﴿٤٨﴾

(४८) अर्थात् मूसा तथा हारुनको प्रभुमा ।

قَالَ آمَنتُمْ لَهُ قَبْلَ أَنْ آذَنَ لَكُمْ ۖ إِنَّهُ لَكَبِيرُكُمُ الَّذِي عَلَّمَكُمُ السِّحْرَ فَلَسَوْفَ تَعْلَمُونَ ۚ لَأُقَطِّعَنَّ أَيْدِيَكُمْ وَأَرْجُلَكُم مِّنْ

(४९) (फ़िरऔनले) भन्यो कि मेरो आज्ञाभन्दा पूर्व तिमी त्यसमाथि ईमान कायम गरिहाल्यौ । नि:सन्देह यही तिम्रो प्रमुख (ठूलो कुरो) हो जसले तिमी सबैलाई जादू सिकाएको छ,[1] त तिमीहरुलाई अहिले ज्ञात भइहाल्नेछ, अवश्य मैले पनि

यहाँसम्मकि आदरणीय मूसाले पनि आफ्नो हृदयमा भयको आभास गरे ﴿فَأَوْجَسَ فِي نَفْسِهِ خِيفَةً مُّوسَىٰ﴾ (सूरः ताहा-६७) अर्थात ती जादूगरहरुलाई आफ्नो सफलता तथा श्रेष्ठतामा अति विश्वास थियो, जस्तो कि यहाँ यी शब्दहरुबाट स्पष्ट छ तर अल्लाह तआ़लाले आदरणीय मूसालाई सान्त्वना दिनुभयो कि भयभीत हुने आवश्यकता छैन । अलि आफ्नो लठ्ठी धर्तीमा फ्याँक अनि हेर । अत: लठ्ठी धर्तीमा फ्याँक्नासाथ त्यसले एउटा भयानक अजिगंरको रुप धारण गर्‍यो तथा एक-एक गरी उनका सम्पूर्ण जादूई खेलहरुलाई निलिहाल्यो । जस्तो कि आगामी आयतमा छ ।

[1]फ़िरऔनका लागि यो घटना विचित्र एवं अत्यन्त आश्चर्यजनक थियो जुन जादूगरहरुद्वारा त्यसले विजय एवं सफलताको आशा गरेर बसेको थियो, तिनीहरु नै न केवल पराजित भए, बरु त्यतिखेरै उनीहरुले त्यस प्रभुमा ईमान क़ायम गरे जसले आदरणीय मूसा तथा हारुनलाई प्रमाण तथा चमत्कार दिएर पठाएको थियो, तर यो कुराको साटो कि फ़िरऔनले पनि विचार तथा चिन्तन गरी ईमान ल्याउनथ्यो, उसले गर्व तथा घमण्डको मार्ग अपनायो तथा जादूगरहरुलाई तर्साउन, धम्काउन प्रारम्भ गरिदियो तथा भन्यो कि तिमी सबै यसका शिष्य (चेला) हौ । तिम्रो उद्देश्य समझमा आउँछ कि यस षड्यन्त्रद्वारा कि तिमीहरु हामीलाई यहाँबाट निष्काशित गरिदेउ ।﴿إِنَّ هَٰذَا لَمَكْرٌ مَّكَرْتُمُوهُ فِي الْمَدِينَةِ لِتُخْرِجُوا مِنْهَا أَهْلَهَا﴾ (सूरः अल-आराफ-१२३)

خِلَافٍ وَّلَأُوصَلِّبَنَّكُمْ أَجْمَعِينَ ﴿٤٩﴾

तिम्रा हात-खुट्टा उल्टा रुपमा काटिदिनेछु तथा तिमी सबैलाई फाँसीमा झुण्ड्याइदिनेछु ।[1]

قَالُوا لَا ضَيْرَ إِنَّا إِلَىٰ رَبِّنَا مُنقَلِبُونَ ﴿٥٠﴾

(५०) उनीहरुले भने कि कुनै चिन्ता छैन,[2] हामी त आफ्नो प्रभुतिर फर्केर जाने नै छौं ।

إِنَّا نَطْمَعُ أَن يَغْفِرَ لَنَا رَبُّنَا خَطَايَانَا أَن كُنَّا أَوَّلَ الْمُؤْمِنِينَ ﴿٥١﴾

(५१) यस आधारमा कि हामी सर्वप्रथम ईमान भएका बनेका छौं,[3] हामीलाई आशा हुन्छ कि हाम्रो प्रभुले हाम्रा सबै त्रुटिहरु क्षमा गरिदिनेछ ।

وَأَوْحَيْنَا إِلَىٰ مُوسَىٰ أَنْ أَسْرِ بِعِبَادِي إِنَّكُم مُّتَّبَعُونَ ﴿٥٢﴾

(५२) तथा हामीले मूसालाई प्रकाशना (वह्य) गऱ्यौं कि रातारात मेरा भक्तहरुलाई निकाली लग, तिमी सबै पछ्याउने छौ ।[4]

فَأَرْسَلَ فِرْعَوْنُ فِي الْمَدَائِنِ حَاشِرِينَ ﴿٥٣﴾

(५३) फ़िरऔनले नगरहरुमा एकत्रित गर्नेहरुलाई पठाइदियो ।

إِنَّ هَٰؤُلَاءِ لَشِرْذِمَةٌ قَلِيلُونَ ﴿٥٤﴾

(५४) कि नि:सन्देह यो गुट साह्रै अल्प

[1]उल्टा हात-खुट्टा काट्नुको अर्थ, दाहिने हात बायाँ खुट्टा अथवा बायाँ हात दायाँ खुट्टा हो, यसबाहेक फाँसीमा चढ्नु अलग । अर्थात् हात-खुट्टा काट्नाले पनि उसको क्रोधको अग्नि चिसो भएन भने, उसले फाँसीमा झुण्ड्याइदिने घोषणासम्म गऱ्यो ।

[2]لا ضير कुनै कुरो छैन अथवा हामीलाई कुनै चिन्ता छैन । अर्थात् अब जुन दण्ड दिन चाहन्छ देओस्, ईमानबाट विमुख हुन सक्दैनौं ।

[3]प्रथम ईमान भएका यसकारण भन्यो कि फ़िरऔनका समुदायका मानिसहरु मुसलमान भएनन् तथा उनीहरुले ईमान स्वीकार गर्नमा प्राथमिकता गरे ।

[4]जब मिश्र देशमा आदरणीय मूसाको निवास अधिक समयसम्म भइहाल्यो तथा हरप्रकारले उनले फ़िरऔन तथा उसका दरबारियाहरुलाई प्रमाणित गरिदिए, परन्तु त्यसका उपरान्त उनीहरु ईमान कायम गर्न तयार भएनन्, तसर्थ अब त्यसका अतिरिक्त कुनै मार्ग शेष रहेको थिएन कि उनीहरुलाई यातना तथा प्रकोपबाट पीडित गरियोस् । अत: अल्लाह तआलाले मूसालाई आदेश दिनुभयो कि रातारात इस्राईलका सन्तानलाई लिएर यहाँबाट निस्किहालून्, तथा भन्नुभयो कि फ़िरऔन तिम्रो पछि लाग्नेछ, नआत्तिनु ।

وَإِنَّهُمْ لَنَا لَغَآئِظُونَ ۝٥٥

संख्यामा छ ।[1]

(५५) तथा त्यसमाथि यिनीहरु हामीलाई अत्यन्त क्रोधित गरिराखेका छन् ।[2]

وَإِنَّا لَجَمِيعٌ حَٰذِرُونَ ۝٥٦

(५६) तथा निःसन्देह हामी बहुसंख्यक छौं, उनीबाट सावधान रहनेहरु ।[3]

فَأَخْرَجْنَٰهُم مِّن جَنَّٰتٍ وَعُيُونٍ ۝٥٧

(५७) अन्ततः हामीले उनीहरुलाई बाग़ तथा स्रोतहरुबाट निकाली बाहिर गरिदियौं ।

وَكُنُوزٍ وَمَقَامٍ كَرِيمٍ ۝٥٨

(५८) तथा कोषहरुबाट र राम्रा-राम्रा स्थानहरुबाट ।[4]

كَذَٰلِكَ وَأَوْرَثْنَٰهَا بَنِىٓ إِسْرَٰٓءِيلَ ۝٥٩

(५९) यसैप्रकार भयो, तथा हामीले ती (सबै कुरा) को उत्तराधिकारी इस्राईलका सन्तानलाई बनाइदियौं ।[5]

[1]यो अपमानित गर्ने उद्देश्यले भन्यो, अन्यथा उनीहरुको संख्या ६ लाख भनिन्छ ।

[2]अर्थात् मेरो आज्ञा बिना उनीहरु यहाँबाट भागिहाल्नु हाम्रो लागि क्रोधको कारण छ ।

[3]यसैले तिनीहरुको यस षड्यन्त्रलाई असफल पार्नका लागि तत्पर रहनुको आवश्यकता छ ।

[4]अर्थात् फ़िरऔन तथा त्यसको सेना इस्राईलको सन्तानको पिछा गर्नको लागि यसरी निस्क्यो कि पुनः फर्केर आफ्ना घर तथा बाग़हरुमा आउने सौभाग्य नै भएन । यसप्रकार अल्लाह तआलाले आफ्नो दूरदर्शीता एवं योजनानुसार उनीहरुलाई सबै सुख-सुविधाहरुबाट बञ्चित गरी उनका उत्तराधिकारी अरुहरुलाई बनाइदियो ।

[5]अर्थात जुन राज्य तथा अधिपत्य फ़िरऔनलाई प्राप्त थियो, त्यो त्यसबाट खोसेर हामीले इस्राईलका सन्तानलाई दिइहाल्यौं । कुनै-कुनै व्याख्याकार भन्दछन् कि यसबाट तात्पर्य मिश्रको जस्तै राज्य तथा संसारिक सुख हामीले इस्राईलका सन्तानलाई पनि प्रदान गर्‍यौं । तर इस्राईलको सन्तान मिश्रबाट निस्केर गए पश्चात पुनः मिश्र फर्केर आएन । यसका अतिरिक्त सूरः दुखानमा भनिएको छ ﴿وَأَوْرَثْنَٰهَا قَوْمًا ءَاخَرِينَ﴾ "हामीले त्यसको उत्तराधिकारी कुनै अन्यलाई बनायौं ।" (ऐसरुत्तफ़ासीर) प्रथम वर्णनको विषयमा ज्ञानीहरु भन्दछन् कि قوماً آخرين मा قوم शब्द यद्यपि सामान्यरुपले प्रयोग भएको छ तर यहाँ सूरः अल शुअरमा जब इस्राईलका सन्तानलाई उत्तराधिकारी

فَأَتْبَعُوهُم مُّشْرِقِينَ ﴿٦٠﴾

(६०) अर्थात् फ़िरऔनका अनुयायी सूर्योदयदेखि नै उनलाई पछ्याउन निस्किहाले ।[1]

فَلَمَّا تَرَاءَا الْجَمْعَانِ قَالَ أَصْحَابُ مُوسَىٰ إِنَّا لَمُدْرَكُونَ ﴿٦١﴾

(६१) अत: जब दुबैले एक-अर्कालाई देखिहाले, त मुसाका साथीहरुले भने, हामी त नि:सन्देह समातिहालियौं ।[2]

قَالَ كَلَّا ۖ إِنَّ مَعِيَ رَبِّي سَيَهْدِينِ ﴿٦٢﴾

(६२) (मूसाले) भने कदापि होइन । विश्वास गर, मेरो प्रभु मसँग छ, जसले अवश्य मलाई देखाउनेछ ।[3]

فَأَوْحَيْنَا إِلَىٰ مُوسَىٰ أَنِ اضْرِب

(६३) हामीले मूसातिर प्रकाशना (वह्य) पठायौं कि समुद्रको पानीमा आफ्नो छडी

बनाउने विषयमा स्पष्ट शब्दहरुमा आइहाल्यो, त यसबाट तात्पर्य इस्राईलका सन्तानको समुदाय नै हुनेछ । परन्तु स्वयं कुर्‌आनमा स्पष्ट शब्दहरुमा भए अनुसार मिश्रबाट निस्के पश्चात इस्राईलका सन्तानलाई 'पवित्र धर्ती' मा प्रवेशको आदेश भयो । तथा उनीहरुले अस्वीकार गर्नाले ४० वर्षहरुसम्मका लागि प्रवेशमा विलम्ब गरेर 'तीह' नामक मैदानमा विचलित पारियो । त्यसका पश्चात उनीहरु 'पवित्र धर्ती' मा प्रवेश प्राप्त गरे । अत: आदरणीय मूसा अलैहिस्सलामको कब्र (चिहान) सहीह हदीस अनुसार "बैतुल मोकद्दस" को निकट नै छ । यसकारण सही अर्थ यो हो कि जस्तो सुख-सुविधाहरु अब इस्राईलका सन्तानलाई प्रदान गरियो । परन्तु मिश्रमा होइन फ़िलिस्तीनमा ।

[1]अर्थात् जब प्रात: भयो तथा फ़िरऔनले थाहा पायो कि इस्राईलका सन्तान रातारात यहाँबाट निस्केर गइसकेछ, त त्यसको राज्यअधिकारलाई ठूलो आघात पुग्यो । तथा सूर्योदय हुनासाथ उनको खोजीमा निस्किहाल्यो ।

[2]अर्थात् फ़िरऔनको सेनालाई देख्नासाथ उनीहरु आत्तिहाले कि अगाडी समुद्र छ तथा पछाडी फ़िरऔनको सेना, अब सुरक्षा कुन प्रकारले सम्भव छ ? अब पुन: त्यही फ़िरऔन तथा त्यसको दासता हुनेछ ।

[3]आदरणीय मूसाले सान्त्वना दिए कि तिम्रो अनुमान ठीक छैन, अब पुन: फ़िरऔनको पकडमा जाने छैन । मेरो प्रभुले अवश्य सुरक्षित मार्गतिर संकेत गर्नेछ ।

بِّعَصَاكَ الْبَحْرَ ۖ فَانفَلَقَ فَكَانَ كُلُّ فِرْقٍ كَالطَّوْدِ الْعَظِيمِ ﴿٦٣﴾

हाने,[१] त त्यसै समयमा समुद्र च्यातियो तथा प्रत्येक पानीको भाग ठूला पर्वत समान भइहाले ।[२]

وَأَزْلَفْنَا ثَمَّ الْآخَرِينَ ﴿٦٤﴾

(६४) तथा हामीले त्यसै स्थानमा अरुहरुलाई निकट ल्याइ उभ्याइदियौं ।[३]

وَأَنجَيْنَا مُوسَىٰ وَمَن مَّعَهُ أَجْمَعِينَ ﴿٦٥﴾

(६५) तथा मूसालाई तथा त्यसका सबै साथीहरुलाई मुक्ति प्रदान गर्‍यौं ।

ثُمَّ أَغْرَقْنَا الْآخَرِينَ ﴿٦٦﴾

(६६) अनि अरु सबैलाई डुबाइदियौं ।[४]

إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿٦٧﴾

(६७) नि:सन्देह यसमा ठूलो शिक्षा छ, तथा उनीहरुमध्ये अधिकतर ईमान कायम गर्नेहरु छैनन् ।[५]

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿٦٨﴾

(६८) तथा नि:सन्देह तपाईंको प्रभु अत्यन्त प्रभावशाली एवं दयालु छ ।

[१]अत: अल्लाहले यो मार्गदर्शन तथा संकेत दियो कि आफ्नो लठ्ठी समुद्रको पानीमा बझार, जसबाट दायाँतिरको पानी दायाँ तथा बायाँतिरको पानी बायाँतिर रोकियो तथा दुवैका मध्य मार्ग बनिहाल्यो ।

[२] فِرق को अर्थ हो समुद्रको भाग, طود को अर्थ हो पर्वत । अर्थात् पानीको प्रत्येक भाग ठूलो पर्वतको रुपमा उभिहाले । यो अल्लाह तआ़लाको तर्फबाट चमत्कारको प्रदर्शन थियो ताकि मूसा तथा उनका समुदाय फ़िरऔनबाट छुटकारा पाउन सकून्, अल्लाहको यस समर्थन बिना फ़िरऔनबाट छुटकारा सम्भव थिएन ।

[३]यसबाट तात्पर्य फ़िरऔन तथा त्यसको सेना हो अर्थात् हामीले अरुहरुलाई समुद्रका निकट पारिदियौं ।

[४]मूसा तथा उनीमाथि ईमान राख्नेहरुलाई हामीले छुटकारा दिलायौं तथा फ़िरऔन एवं त्यसको सेना जब तिनै मार्गहरुबाट गुज्रिन थाल्यो त हामीले समुद्रलाई पूर्वत स्थितिमा प्रवाहित गरिदियौं, जसले गर्दा फ़िरऔन आफ्नो सेना सहित डुब्यो ।

[५]अर्थात् यद्यपि यस घटनामा जुन अल्लाह शर्वशक्तिमान हुने कुरोको द्योतक छ, ठूलो निशानी छ, परन्तु यसका उपरान्त पनि अधिकतर मानिसहरु ईमान सुदृढ गर्दैनन् ।

(६९) तथा उनीहरुलाई इब्राहीमको घटना पनि सुनाइदियो ।

وَاتْلُ عَلَيْهِمْ نَبَأَ إِبْرَاهِيمَ ﴿٦٩﴾

(७०) जबकि उनले आफ्नो पिता तथा आफ्नो समुदायसित भने कि तिमी कसको इबादत गर्दछौ ?

إِذْ قَالَ لِأَبِيهِ وَقَوْمِهِ مَا تَعْبُدُونَ ﴿٧٠﴾

(७१) उनीहरुले भने हामी मूर्तिहरुको इबादत गर्दछौं, हामी त निरन्तर उनका पूजारी बनिसकेका छौं ।[१]

قَالُوا نَعْبُدُ أَصْنَامًا فَنَظَلُّ لَهَا عَاكِفِينَ ﴿٧١﴾

(७२) उहाँ (अलैहिस्सलाम) ले भन्नुभयो कि जब तिमी उनीहरुलाई पुकार्दछौ त के उनीहरु सुन्दछन् पनि ?

قَالَ هَلْ يَسْمَعُونَكُمْ إِذْ تَدْعُونَ ﴿٧٢﴾

(७३) अथवा तिमीहरुलाई लाभ-हानि पनि पुऱ्याउन सक्छन् ।[२]

أَوْ يَنفَعُونَكُمْ أَوْ يَضُرُّونَ ﴿٧٣﴾

(७४) उनीहरुले भने यो (हामी केही पनि जान्दैनौं) हामीले त आफ्ना पूर्वजहरुलाई यसप्रकार गरिराखेका पायौं ।[३]

قَالُوا بَلْ وَجَدْنَا آبَاءَنَا كَذَٰلِكَ يَفْعَلُونَ ﴿٧٤﴾

(७५) (उहाँले) भन्नुभयो केही जान्दछौ पनि,[४] जसलाई तिमी पूजिराखेका छौ ।

قَالَ أَفَرَأَيْتُم مَّا كُنتُمْ تَعْبُدُونَ ﴿٧٥﴾



[१]अर्थात् रात-दिन उनीहरुको पूजा गर्दछौं ।

[२]अर्थात् तिमी उनका पूजा छाडिदेउ, त के उनीहरु तिमीलाई हानि पुऱ्याउँछन् ?

[३]जब उनीहरु आदरणीय इब्राहीमका प्रश्नको कुनै उत्तर दिन सकेनन् त यो भनेर छुट्कारा प्राप्त गरिहाल्यो । जस्तो आज पनि मानिसहरुलाई कुरआन तथा हदीसका कुरा भनिन्छ त य.ही तर्क प्रस्तुत गर्दछन् कि हाम्रो परिवारमा हाम्रा पूर्वजहरुका समयदेखि यही सब हुँदै आइराखेको छ, हामी त्यसलाई छोड्न सक्दैनौं ।

[४] أفرأيتم को अर्थ यहाँ देख्नु, चिन्तन तथा विचार गर्नु हो ।

| | |
|---|---|
| (७६) तिमी तथा तिम्रा पूर्व पिता, | أَنتُمْ وَءَابَآؤُكُمُ ٱلْأَقْدَمُونَ ﴿٧٦﴾ |
| (७७) उनी सबै मेरा शत्रु हुन्[1] सत्य अल्लाह (तआला) बाहेक जो सबै लोकहरुको पालनहार हो ।[2] | فَإِنَّهُمْ عَدُوٌّ لِّيٓ إِلَّا رَبَّ ٱلْعَٰلَمِينَ ﴿٧٧﴾ |
| (७८) जसले मलाई पैदा गरेको छ तथा त्यही मेरो मार्गदर्शन गर्दछ ।[3] | ٱلَّذِى خَلَقَنِى فَهُوَ يَهْدِينِ ﴿٧٨﴾ |
| (७९) त्यही हो जसले मलाई खुवाउँछ, पिलाउँछ ।[4] | وَٱلَّذِى هُوَ يُطْعِمُنِى وَيَسْقِينِ ﴿٧٩﴾ |
| (८०) तथा जब म रोगी हुन्छु त मलाई निरोग गर्दछ ।[5] | وَإِذَا مَرِضْتُ فَهُوَ يَشْفِينِ ﴿٨٠﴾ |
| (८१) तथा त्यसैले मलाई मार्नेछ, अनि जीवित गर्नेछ ।[6] | وَٱلَّذِى يُمِيتُنِى ثُمَّ يُحْيِينِ ﴿٨١﴾ |

[1]यसकारण कि तिमी सबै अल्लाहलाई छाडि अरुहरुको पूजा गर्दछौ । केही व्याख्याकारहरुले यसको अर्थ यो वर्णन गरेका छन् कि जसको तिमी तथा तिम्रा पूर्वज पूजा गर्दै आइराखेका छन्, ती सबै देवता मेरा शत्रु हुन् अर्थात् म उनीबाट अत्यन्त विमुख छु ।

[2]अर्थात् त्यो शत्रु होइन, बरु त्यो त यस लोक तथा परलोकमा मेरो संरक्षक एवं मित्र हो ।

[3]अर्थात् सांसारिक एवं धार्मिक हितहरु एवं लाभतिर ।

[4]अर्थात् विभिन्न प्रकारको जीविका प्रदान गर्ने, तथा जुन पानी हामी पिउँछौं, त्यसलाई उपलब्ध गराउने पनि त्यही अल्लाह हो ।

[5]रोगलाई समाप्त गरी स्वास्थ्य प्रदान गर्ने पनि त्यही हो । अर्थात् औषधिहरुमा स्वास्थ्य प्रदानको शक्ति प्रदान गर्नुको आदेश पनि त्यही दिन्छ । अन्यथा औषधिहरु पनि अप्रभावी सिद्ध हुन्छन् । रोग पनि अल्लाहका आदेश एवं इच्छाले आउँछ । परन्तु यसको सम्बन्ध अल्लाहसित स्थापित गर्न सकिन्न बरु आफूतिर गऱ्यो । यो अर्थ अल्लाहको वर्णनमा त्यसको आदर तथा सम्मानको पक्ष सुरक्षित राख्यो ।

[6]अर्थात् केयामतका दिन जब त्यसले सम्पूर्ण मानिसहरुलाई पुनः जीवित गरी एकत्रित गर्नेछ, मलाई पनि जीवित गर्नेछ ।

وَالَّذِيٓ أَطۡمَعُ أَن يَغۡفِرَ لِي خَطِيٓـَٔتِي يَوۡمَ ٱلدِّينِ ﴿٨٢﴾

(८२) तथा जससित आशा गाँसिएको छ कि त्यसले प्रतिफल प्रदान गर्ने दिनमा मेरा पापलाई क्षमा गर्नेछ ।[1]

رَبِّ هَبۡ لِي حُكۡمٗا وَأَلۡحِقۡنِي بِٱلصَّٰلِحِينَ ﴿٨٣﴾

(८३) हे मेरो प्रभु ! मलाई प्रवोध प्रदान गर[2] तथा मलाई पवित्र मानिसहरुमा सम्मिलित गराइदेउ ।

وَٱجۡعَل لِّي لِسَانَ صِدۡقٖ فِي ٱلۡأٓخِرِينَ ﴿٨٤﴾

(८४) तथा मेरो पवित्र याद आगामी मनुष्यहरुमा पनि शेष राख ।[3]

وَٱجۡعَلۡنِي مِن وَرَثَةِ جَنَّةِ ٱلنَّعِيمِ ﴿٨٥﴾

(८५) तथा मलाई सुखहरु भएको स्वर्गका उत्तराधिकारीहरुमध्ये बनाइदेउ ।

وَٱغۡفِرۡ لِأَبِيٓ إِنَّهُۥ كَانَ مِنَ ٱلضَّآلِّينَ ﴿٨٦﴾

(८६) तथा मेरो पितालाई क्षमा गरिदेउ, नि:सन्देह त्यो विचलित हुनेहरुमध्ये थियो ।[4]

---

[1]यहाँ 'असा'; विश्वासको अर्थमा छ। किनभने कुनै महाशक्तिबाट आशा, विश्वासको समकक्ष हुन्छ, तथा अल्लाह त सम्पूर्ण विश्वको सर्वमहान अस्तित्व हो, त्योसँग सम्बन्धित 'असा' विश्वास किन हुनेछैन ? यसैकारण व्याख्याकारहरु भन्दछन् कि कुरआनमा जहाँपनि अल्लाहको लागि शव्द عسى प्रयोग भएको छ, त्यो विश्वासको अर्थमा नै छ। خَطِيٓـَٔتِي शब्दमा خَطِيٓـَٔة एक वचन छ परन्तु خطايا बहुवचन को अर्थमा छ। अंबिया अलैहिस्सलाम यद्यपि निष्पाप हुन्छन्, यसकारण उनीहरुबाट कुनै महापाप घटित हुनु सम्भव छैन। परन्तु तैपनि आफ्ना केही कर्महरुलाई आलस्य ठानी अल्लाहको सदनमा क्षमा याचना गर्नेछन् ।

[2]आदेश तथा विज्ञानबाट तात्पर्य ज्ञान तथा समझ अथवा नबूअत तथ रिसालत अथवा अल्लाहको आज्ञा तथा विधानको जानकारी हो ।

[3]अर्थात् जुन मानिसहरु म पश्चात केयामतसम्म आउनेछन्, तिनीहरु मेरो स्मरण राम्रा शब्दहरुमा गरिरहून् । यसबाट ज्ञात भयो कि पुण्यहरुको प्रतिफल अल्लाह तआला संसारमा राम्रा शब्दहरु तथा उत्तम प्रशंसाको रुपमा प्रदान गर्दछ । जस्तो आदरणीय इब्राहीमको स्मरण राम्रा शब्दहरुमा सबै धर्मका मानिसहरु गर्दछन्, कसैलाई पनि उनको मान-सम्मानबाट इन्कार छैन ।

[4]यो दुआ (प्रार्थना) त्यस समय गरेका थिए, जब उनलाई ज्ञात थिएन कि मुश्रिक (अल्लाहको शत्रु) का लागि मोक्षको प्रार्थना गर्नु निषेध छ, जब अल्लाह तआलाले यो स्पष्ट गरिदियो त उनले आफ्नो पिताबाट पनि अलगावको प्रदर्शन गरिदिए । (सूर:अत-तौबा-११४)

وَلَا تُخْزِنِي يَوْمَ يُبْعَثُونَ ﴿٨٧﴾

(८७) तथा जुन दिन मानिसहरु पुन: जीवित गरिन्छन् मलाई अपमानित नगर ।[1]

يَوْمَ لَا يَنْفَعُ مَالٌ وَلَا بَنُونَ ﴿٨٨﴾

(८८) जुन दिन कि धन तथा पुत्र केही काम आउने छैन ।

إِلَّا مَنْ أَتَى اللَّهَ بِقَلْبٍ سَلِيمٍ ﴿٨٩﴾

(८९) परन्तु (लाभप्रद त्यही हुनेछ,) जो अल्लाहका समक्ष निर्दोष हृदय लिएर जान्छ ।[2]

وَأُزْلِفَتِ الْجَنَّةُ لِلْمُتَّقِينَ ﴿٩٠﴾

(९०) तथा सदाचारीहरु (परहेज़गार) का लागि स्वर्ग अत्यन्त निकट ल्याइदिनेछ ।

وَبُرِّزَتِ الْجَحِيمُ لِلْغَاوِينَ ﴿٩١﴾

(९१) तथा विचलितहरुका लागि नरक प्रत्यक्ष गरिदिइनेछ ।[3]

وَقِيلَ لَهُمْ أَيْنَمَا كُنْتُمْ تَعْبُدُونَ ﴿٩٢﴾

(९२) तथा उनीहरुसित सोधिनेछ कि तिमी जसको पूजा गरिरहेका थियौ तिनीहरु कहाँ छन् ।

---

[1]अर्थात् सबै सृष्टिका समक्ष मेरो पकड गरेर अथवा यातना दिएर । हदीसमा वर्णित छ कि केयामतको दिन जब आदरणीय इब्राहीम आफ्ना पिताको नराम्रो अवस्था देख्नेछन्, त एकपटक फेरि अल्लाह समक्ष उनको लागि प्रार्थना गर्नेछन्, हे अल्लाह ! यसभन्दा अधिक मेरो लागि अपमान के होला ? अल्लाह तआलाले भन्नेछ कि मैले स्वर्ग काफिरहरुका लागि निषेध (हराम) गरिदिएको छु । त्यस पश्चात उनका पितालाई फोहोरमा मुछिएको बिज्जू जस्तै उनलाई नरकमा हालिदिइनेछ । (सहीह बुखारी सूर: अल शूअरा, किताबुल अंबिया, बाब कौलिल्लाह वत्तख़ज़ल्लाहु इब्राहीम ख़लीला)

[2]स्वच्छ हृदय अथवा निर्दोष हृदयबाट तात्पर्य त्यो हृदय हो जुन शिर्कबाट शुद्ध हुन्छ । अर्थात् ईमान भएको हृदय यसकारण कि काफ़िर तथा द्वयवादीको हृदय रोगी हुन्छ । केही ज्ञाताहरु भन्दछन् : विदअतबाट शून्य तथा सुन्नतबाट सन्तोष हृदय, केही विद्वानका निकट माया-मोहबाट शुद्ध हृदय तथा केहीका निकट मूर्खताको अन्धकार तथा नैतिक पतनबाट स्वच्छ हृदय, यी सबै भावार्थ ठीक हुन सक्दछन् किनभने ईमान भएकाको हृदय वर्णित सबै नराम्रा कुराबाट शुद्ध हुन्छ ।

[3]अर्थ यो हो कि स्वर्ग अथवा नरकमा प्रवेशभन्दा पूर्व उसलाई उनका समक्ष प्रस्तुत गरिदिइनेछ, जसबाट काफ़िरहरुको दुखमा तथा ईमान भएकाको प्रसन्नतामा अझै अधिकता हुनेछ ।

مِنْ دُوْنِ اللّٰهِ ؕ هَلْ يَنْصُرُوْنَكُمْ اَوْ يَنْتَصِرُوْنَ ۞ (९३) जो अल्लाह (तआ़ला) का अतिरिक्त थिए, के उनीहरु तिम्रो सहायता गर्दछन् ? अथवा कुनै बदला लिन सक्छन् ?

فَكُبْكِبُوْا فِيْهَا هُمْ وَالْغَاوٗنَ ۞ (९४) अत: ती सबै तथा सबै विचलित भएकाहरु नरकमा माथि-तल हालिदिइनेछन् ।

وَجُنُوْدُ اِبْلِيْسَ اَجْمَعُوْنَ ۞ (९५) तथा इब्लीसका सबै सेना पनि ।[३]

قَالُوْا وَهُمْ فِيْهَا يَخْتَصِمُوْنَ ۞ (९६) उनीहरु त्यहाँ एक-आपसमा लड्दै-भगड्दै भन्नेछन् ।

تَاللّٰهِ اِنْ كُنَّا لَفِيْ ضَلٰلٍ مُّبِيْنٍ ۞ (९७) अल्लाहको सौगन्ध ! नि:सन्देह हामी त खुल्ला रुपमा पथ-भ्रष्ट थियौं ।

اِذْ نُسَوِّيْكُمْ بِرَبِّ الْعٰلَمِيْنَ ۞ (९८) जबकि तिमीलाई सब लोकको प्रभु समान भन्ठानेका थियौं ।[४]

وَمَاۤ اَضَلَّنَاۤ اِلَّا الْمُجْرِمُوْنَ ۞ (९९) तथा हामीलाई त कुकर्मीहरु बाहेक कुनै अन्यले पथ-भ्रष्ट गरेको थिएन ।[५]

[१]अर्थात् तिमीबाट यातना समाप्त गर्दछन् अथवा स्वयं आफूलाई बचाउँदछन् ।

[२]अर्थात् देवता एवं पूजारीहरु सबैलाई मालको गाँठो जस्तै एक-अर्कामाथि हालिदिनेछ ।

[३]यसबाट तात्पर्य त्यो सेना हो जुन मानिसहरुलाई विचलित गर्दथ्यो ।

[४]संसारमा वस्तुकलाको आधारमा काटिएको पत्थर तथा कब्रमाथि बनेको आकर्षक गुम्वत, मुश्रिकहरुलाई दैवी शक्ति प्रतीत हुन्छ । परन्तु केयामतका दिन थाहा हुन्छ कि यो त स्पष्ट विचलन थियो कि उनीहरुलाई प्रभु समान ठान्थे ।

[५]अर्थात् त्यहाँ गएर थाहा हुनेछ कि हामीलाई अरु अपराधीहरुले विचलित पारे । संसारमा उनीहरुलाई बारम्बार सतर्क गराइयो कि अमूक-अमूक कार्य विचलन हो, धर्मको नाममा अधर्म हो, शिर्क हो त मान्दैनन्, सोच-विचार गर्दछन् कि सत्य तथा असत्य उनलाई प्रष्ट हुनसकोस् ।

فَمَا لَنَا مِن شَافِعِينَ ﴿١٠٠﴾

(१००) अब त हाम्रो कोही सिफारिश गर्ने पनि छैन ।

وَلَا صَدِيقٍ حَمِيمٍ ﴿١٠١﴾

(१०१) तथा न कोही (सच्चा) शुभ-चिन्तक मित्र ।[1]

فَلَوْ أَنَّ لَنَا كَرَّةً فَنَكُونَ مِنَ الْمُؤْمِنِينَ ﴿١٠٢﴾

(१०२) यदि हामीलाई एक पटक पुन: जाने अवसर प्राप्त हुने भए हामी पक्का सच्चा ईमान भएका बनिहाल्थ्यौं ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿١٠٣﴾

(१०३) कि यो कुरा नि:सन्देह एउटा अत्यन्त ठूलो निशानी हो ।[3] उनीहरुमा अधिकतर मानिस ईमान भएका छैनन् ।[4]

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿١٠٤﴾

(१०४) तथा नि:सन्देह तपाईंको प्रभु नै प्रभावशाली दयालु छ ।

كَذَّبَتْ قَوْمُ نُوحٍ الْمُرْسَلِينَ ﴿١٠٥﴾

(१०५) नूहका सम्प्रदायले पनि नबीहरुलाई झुठ्लाए ।[5]

---

[1]पापी मुसलमानहरुको सिफारिश त अल्लाहको आज्ञा पश्चात अम्बिया पुण्यात्माहरु विशेषरुपले नबी करीम सल्लल्लाहु अलैहि वसल्लमले गर्नुहुनेछ । परन्तु काफिर तथा मुश्रिकको सिफारिश गर्नुको आज्ञा कसैलाई पनि हुनेछैन, न साहस, तथा न त्यहाँ मित्रता नै काम आउनेछ ।

[2]काफिर तथा मुश्रिक क़ेयामतका दिन पुन: संसारमा आउने कामना गर्नेछन् ताकि उनीहरुले अल्लाहको आज्ञाको पालना गरेर अल्लाहलाई प्रसन्न गर्न सकून् । परन्तु अल्लाह तआलाले अन्य स्थानमा भन्नुभएको छ कि यिनीहरुलाई पुन: संसारमा पठाए पनि त्यहीं सबैकुरा गर्नेछन् जुन पहिला गर्दैआइराखेका थिए ।

[3]अर्थात् आदरणीय इब्राहीमको मूर्तिको विषयमा आफ्ना समुदायसित विवाद तथा तर्क-वितर्क एवं अल्लाह एक हुने कुरोको प्रमाण यो यस कुरोको स्पष्ट निशानी हो कि अल्लाह बाहेक कोही पूज्य छैन ।

[4]केही ज्ञाताहरुले यसको सम्बन्ध मक्काका मूर्तिपूजक अर्थात् कुरैशसित भनेका छन् अर्थात् उनको वहुमत ईमान कायम गर्ने होइनन् ।

[5]नूहका समुदायले यद्यपि केवल आफ्नो पैग़म्बर आदरणीय नूहलाई झुठ्लाएका थिए । परन्तु एक नबीलाई झुठ्लाउन सबै नबीहरुलाई झुठ्लाउनु सरह तथा सूचक छ । यसैकारण भने कि नूहका समुदायले पैग़म्बरहरुलाई झुठ्लाए ।

إِذْ قَالَ لَهُمْ أَخُوهُمْ نُوحٌ أَلَا تَتَّقُونَ ﴿١٠٦﴾

(१०६) जबकि उनका भाई नूहले[1] भने कि के तिमीलाई अल्लाहको भय छैन ?

إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٠٧﴾

(१०७) (सुन,) म तिमीतिर अल्लाहको न्यासिक रसूल हूँ ।[2]

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١٠٨﴾

(१०८) अत: तिमी अल्लाहसित तर्सनु पर्छ तथा मेरो कुरा मान्नुपर्छ ।[3]

وَمَا أَسْأَلُكُمْ عَلَيْهِ مِنْ أَجْرٍ إِنْ أَجْرِيَ إِلَّا عَلَىٰ رَبِّ الْعَالَمِينَ ﴿١٠٩﴾

(१०९) तथा म तिमीसित त्यसमा कुनै पारितोषिक चाहन्न, मेरो पारिश्रमिक त केवल सर्वलोकको प्रभुको पासमा छ ।[4]

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١١٠﴾

(११०) अत: तिमी अल्लाहको भय राख तथा मेरो अनुपालन गर ।[5]

قَالُوا أَنُؤْمِنُ لَكَ وَاتَّبَعَكَ الْأَرْذَلُونَ ﴿١١١﴾

(१११) (समुदायले) उत्तर दिए कि के हामी तिमीमाथि विश्वास गरौं ! तिम्रा अनुकरण गर्ने त पतितहरु हुन् ।[6]

---

[1]भाई यसकारण भने कि आदरणीय नूह उनैका वंशका एक व्यक्ति थिए ।

[2]अर्थात् अल्लाहले जुन आदेश दिएर मलाई पठाउनु भएको छ, त्यो बिना घटी तथा थप गरी तिमीसम्म पुर्याउने छु, यसमा कमी-बृद्धि गर्दिन ।

[3]अर्थात् म तिमीलाई जुन अल्लाहमाथि ईमान कायम गर्ने तथा शिर्क नगर्ने कुराको आमन्त्रण दिइरहेको छु, त्यसमा मेरो कुरा मान ।

[4]म तिमीलाई जुन सावधान गरिराखेको छु, त्यसको कुनै पारिश्रमिक तिमीसित माँग्दिन, बरु त्यसको पारिश्रमिक समस्त जगतका प्रभुको जिम्मामा छ, जुन केयामतका दिन त्यसले प्रदान गर्नेछ ।

[5]यो बलदिने स्वरुप छ तथा अलग-अलग कारणहरुका आधारमा पनि, प्रथम अनुकरणको आमन्त्रण ईमान्दारीको आधारमा थियो, अब अनुकरणको आमन्त्रण बिना कुनै लोभ छ ।

[6] الأرذلون बहुवचन हो أرذل को । धन-वैभव नभएका, तथा त्यसका कारण समाजमा हीन सम्भनेहरु । तथा तिनैमा ती मानिसहरु पनि आउँछन् जो हीन सम्भिने व्यवसायसित सम्बन्धित छन् ।

قَالَ وَمَا عِلْمِي بِمَا كَانُوا يَعْمَلُونَ ﴿١١٢﴾

(११२) उहाँले भन्नुभयो, मलाई के थाहा कि उनीहरु पहिला के गर्दै थिए ?[१]

إِنْ حِسَابُهُمْ إِلَّا عَلَىٰ رَبِّي لَوْ تَشْعُرُونَ ﴿١١٣﴾

(११३) उनको हिसाब त मेरो प्रभुमाथि छ[२] यदि तिमीलाई प्रबोध छ भने ।

وَمَا أَنَا بِطَارِدِ الْمُؤْمِنِينَ ﴿١١٤﴾

(११४) तथा म ईमान्दारहरुलाई धपाउने (धक्का दिने) होइन ।[३]

إِنْ أَنَا إِلَّا نَذِيرٌ مُبِينٌ ﴿١١٥﴾

(११५) म त स्वच्छ रुपले तर्साउने (सावधान गर्ने) हूँ ।[४]

قَالُوا لَئِنْ لَمْ تَنْتَهِ يَا نُوحُ لَتَكُونَنَّ مِنَ الْمَرْجُومِينَ ﴿١١٦﴾

(११६) उनीहरुले भने कि हे नूह ! यदि तिमी रोकिएनौं भने अवश्य तिमीलाई ढुङ्गाहरुले हानी मारिदिइनेछ ।

قَالَ رَبِّ إِنَّ قَوْمِي كَذَّبُونِ ﴿١١٧﴾

(११७) (उहाँले) भन्नुभयो मेरो प्रभु ! मेरो समुदायले मलाई झुठ्लाइदिए ।

فَافْتَحْ بَيْنِي وَبَيْنَهُمْ فَتْحًا وَنَجِّنِي وَمَنْ مَعِيَ مِنَ الْمُؤْمِنِينَ ﴿١١٨﴾

(११८) अथवा तिमीले म तथा उनीहरुबीच कुनै निश्चित निर्णय गरिदेउ तथा मलाई तथा मेरा ईमान भएका साथीहरुलाई मुक्ति प्रदान गरिदेउ ।

[१]अर्थात् मलाई यस कुराको प्रभारी बनाइएको छैन कि म मानिसहरुका वंश तथा जाति, धनवान तथा निर्धन तथा उनका व्यवसायको खोजी गरुन्, बरु मेरो कर्तव्य त केवल यति छ कि म ईमानको आमन्त्रण दिउँ तथा जो उसलाई स्वीकार गर्दछ, त्यो चाहे जुन व्यवसायसित सम्बन्धित होस्, त्यसलाई आफ्नो गुटमा सम्मिलित गरिहालूँ ।

[२]अर्थात् उनका अन्त: करण तथा कर्मको खोजी गर्नु, यो अल्लाहको कार्य हो ।

[३]यो उनको यस इच्छाको उत्तर हो कि हीन वर्गका मानिसहरुलाई आफूबाट टाढा गरिदेउ, अनि हामी तिम्रो समूहमा सम्मिलित भइहाल्नेछौं ।

[४]अत: जो अल्लाहसित भयको मेरो अनुकरण गर्नेछ, त्यो मेरो हो तथा म त्यसको हूँ, चाहे संसारको दृष्टिमा त्यो सम्मानति होस् अथवा अपमानित, श्रेष्ठ होस् अथवा हीन ।

| | |
|---|---|
| (११९) अत: हामीले उसलाई तथा उसका साथीहरुलाई गरिएको डुङ्गामा (सवार गरेर) स्वाधीनता प्रदान गऱ्यौं । | فَأَنجَيْنَٰهُ وَمَن مَّعَهُۥ فِى ٱلْفُلْكِ ٱلْمَشْحُونِ ﴿١١٩﴾ |
| (१२०) अनि त्यसको पश्चात शेष सबैलाई हामीले डुबाइदियौं ।[1] | ثُمَّ أَغْرَقْنَا بَعْدُ ٱلْبَاقِينَ ﴿١٢٠﴾ |
| (१२१) नि:सन्देह यसमा निकै ठूलो शिक्षा छ । तथा उनीहरुमध्ये अधिकतर मानिसहरु ईमान स्थापित गर्नेहरु थिएनन् पनि । | إِنَّ فِى ذَٰلِكَ لَءَايَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿١٢١﴾ |
| (१२२) तथा नि:सन्देह तपाईंको प्रभु अवश्य त्यही हो अत्यन्त दया गर्ने । | وَإِنَّ رَبَّكَ لَهُوَ ٱلْعَزِيزُ ٱلرَّحِيمُ ﴿١٢٢﴾ |
| (१२३) 'आद' (सम्प्रदाय) ले पनि रसूलहरुलाई झुठलाए ।[2] | كَذَّبَتْ عَادٌ ٱلْمُرْسَلِينَ ﴿١٢٣﴾ |
| (१२४) जबकि उनीसित उनका भाई हूद[3] ले भने कि के तिमी तर्सन्नौ ? | إِذْ قَالَ لَهُمْ أَخُوهُمْ هُودٌ أَلَا تَتَّقُونَ ﴿١٢٤﴾ |

[1] यही विवरण केही पूर्व पनि गुज्रिसकेका छन् तथा केही अगाडी पनि आउने छन् कि आदरणीय नूहका साढे नौं सय वर्षको धर्म-प्रचारका पश्चात पनि उनका समुदायका मानिसहरु दुर्व्यवहार तथा विमुख नै रहे, अन्त्यमा आदरणीय नूहले शाप दिए, अल्लाह तआलाले डुङ्गा बनाउन तथा त्यसमा ईमान भएका, पशुहरु र आवश्यक सामानहरुलाई राख्न आदेश दियो र यसप्रकार ईमान भएकालाई वचाइहालियो तथा शेष सबैलाई, यहाँसम्मकि पत्नी तथा पुत्रलाई पनि जो ईमान स्थापित गरेका थिएनन्, डुबाइदियो ।

[2] 'आद' उनका परम पूर्वजको नाम थियो, जसको नाममा उनका समुदायको नाम पऱ्यो । यहाँ आदलाई क़बीला मानेर كَذَّبَتْ (स्त्रीलिगं रुप) प्रयोग गरिएको छ ।

[3] हूदलाई पनि आदको भाई यसकारण भनिएको छ कि प्रत्येक नबी त्यस समुदायको व्यक्ति हुन्थ्यो तथा त्यसै आधारमा उनलाई त्यस समुदायको भाइ भनिएको छ, जस्तो कि अगाडी पनि आउनेछ तथा नबी तथा रसूलहरुको यो मानवीय रुप पनि उनीबाट ईमान क़ायम गर्नुमा बाध्य रहेको छ । उनको विचार थियो कि नबी मनुष्य होइन, मनुष्यभन्दा उच्च हुनुपर्छ । आज पनि यस पूर्ण सत्यसित अपरिचित मानिसहरु इस्लामका पैग़म्बर नबी करीम सल्लल्लाहु अलैहि वसल्लमलाई

إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٢٥﴾

(१२५) म तिम्रो अमानतदार (विश्वसनीय) पैग़म्बर (सन्देशवाहक) हूँ ।

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١٢٦﴾

(१२६) अत: अल्लाहसित तर्स तथा मेरो भनाई मान ।

وَمَا أَسْأَلُكُمْ عَلَيْهِ مِنْ أَجْرٍ إِنْ أَجْرِيَ إِلَّا عَلَىٰ رَبِّ الْعَالَمِينَ ﴿١٢٧﴾

(१२७) तथा म त्यस सम्बन्धमा तिमीसित कुनै पारिश्रमिक माँग्दिन, मेरो मजदूरी समस्त लोकको प्रभुसित नै छ ।

أَتَبْنُونَ بِكُلِّ رِيعٍ آيَةً تَعْبَثُونَ ﴿١٢٨﴾

(१२८) के तिमी प्रत्येक उच्च स्थानमा खेल (क्रिडा) को रुप तमाशाको प्रतीक (चिन्ह) बनाइराखेका छौ ।[1]

وَتَتَّخِذُونَ مَصَانِعَ لَعَلَّكُمْ تَخْلُدُونَ ﴿١٢٩﴾

(२९) तथा ठूला भव्य महल बनाइराखेका छौ, मानौं तिमी सधैं यही रहने छौ ।[2]

وَإِذَا بَطَشْتُمْ بَطَشْتُمْ جَبَّارِينَ ﴿١٣٠﴾

(१३०) तथा जब कसैमाथि हात प्रहार गर्दछौ त निर्दयी एवं क्रुरताले प्रहार गर्दछौ ।[3]

---

मनुष्यभन्दा उच्च सिद्ध गर्नमा लागेका छन्, यद्यपि उहाँ पनि कुरैश वंशका एक व्यक्ति हुनुहुन्थ्यो, जसतिर प्रथम उनलाई पैग़म्बर बनाएर पठाइएको थियो ।

[1] ريع वहुवचन हो ريعة को । पहाडी, उच्च स्थान, पर्वत घाटी, यिनीहरु ती मार्गमा कुनै भवन निर्मित गर्दथे भने आकर्षण तथा सुन्दरता अद्वितीय अर्थात् श्रेष्ठतम् हुन्थ्यो । परन्तु यसको उद्देश्य त्यसमा रहनु हुन्नथ्यो, बरु केवल खेलकुद हुन्थ्यो । आदरणीय हूदले यसलाई मनाही गरे कि यो तिमी यस्तो कार्य गर्दछौ, जसमा समय तथा साधनको हानि छ तथा त्यसको उद्देश्य पनि यस्तो छ जसबाट धार्मिक तथा सांसारिक कुनै लाभ सम्बन्धित छैन । बरु त्यसको व्यर्थ तथा हानिकारक हुने कुरोमा कुनै सन्देह छैन ।

[2] यसैप्रकार उनी ठूला सुदृढ तथा भव्य भवन निर्मित गर्दथे, मानौं उनीहरु सधैं तिनै भवनमा रहनेछन् ।

[3] यो उनका अत्याचार क्रुरता तथा शक्ति एवं साधनतिर संकेत छ ।

فَاتَّقُوا اللّٰهَ وَ اَطِيْعُوْنِ ۝١٣١

(१३१) अल्लाहसित तर्स तथा मेरो कुरा मान ।[1]

وَ اتَّقُوا الَّذِيْٓ اَمَدَّكُمْ بِمَا تَعْلَمُوْنَ ۝١٣٢

(१३२) तथा त्योसित तर्स जसले ती वस्तुहरुबाट तिम्रो सहायता गऱ्यो जसलाई तिमी जान्दछौ ।

اَمَدَّكُمْ بِاَنْعَامٍ وَّ بَنِيْنَ ۝١٣٣

(१३३) उसले तिम्रो सहायता गऱ्यो धन तथा सन्तानद्वारा ।

وَجَنّٰتٍ وَّعُيُوْنٍ ۝١٣٤

(१३४) तथा बगैंचा एवं स्रोतहरुबाट ।

اِنِّيْٓ اَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ عَظِيْمٍ ۝١٣٥

(१३५) मलाई त तिमीमाथि ठूलो दिनको यातनाको भय छ ।[2]

قَالُوْا سَوَآءٌ عَلَيْنَآ اَوَعَظْتَ اَمْ لَمْ تَكُنْ مِّنَ الْوٰعِظِيْنَ ۝١٣٦

(१३६) (उनीहरुले) भने कि तपाईं भाषण दिनुस् अथवा भाषण दिनेहरुमध्ये नहुनुस्, हामीलाई समान छ ।

اِنْ هٰذَآ اِلَّا خُلُقُ الْاَوَّلِيْنَ ۝١٣٧

(१३७) यो त प्राचीन कालका मानिसहरुको धर्म हो ।[3]

وَمَا نَحْنُ بِمُعَذَّبِيْنَ ۝١٣٨

(१३८) तथा हामी कदापि यातनाग्रस्त हुने छैनौं ।[4]

---

[1]जब उनका दुर्गुणहरुको वर्णन गरे जुन उनका संसारमा क्रुरता तथा अत्याचार एवं अन्यायका द्योतक थिए, त पुन: उनीहरुलाई अल्लाहसित भय गर्न तथा आफ्नो अनुकरण गर्न आमन्त्रण दिए ।

[2]अर्थात् यदि तिमीले आफ्नो कुफ्रमाथि दुराग्रह गऱ्यौ तथा अल्लाहले जे तिमीलाई यी सुख प्रदान गरेका छन्, त्यसमा कृतज्ञता व्यक्त गरेनौं भने त तिमी अल्लाहको यातनाका अधिकारी हुनेछौ । यो प्रकोप संसारमा पनि आउन सक्छ । परलोक त छ नै यातना एवं पुण्यका लागि । त्यहाँ यातनाबाट छुटकारा पाउनु सम्भव नै हुनेछैन ।

[3]अर्थात् ती नै कुरा हुन् जो प्रचीनकालमा पनि मानिसहरु गर्दैआएका हुन् अथवा यो अर्थ हो कि हामी जुन धर्म तथा रीति-रिवाजमा दृढ छौं, ती तिनै हुन् जुन हाम्रा पूर्वज गर्दैआइरहेका छन्, दुवैको अर्थ यही हो कि हामी आफ्ना पैतृक धर्मलाई छाड्न सक्दैनौं ।

[4]जब उनीहरुले यस कुरालाई व्यक्त गरे कि हामी आफ्ना पैतृक धर्मलाई त्याग्न सक्दैनौं र यसमा आखिरतमाथि विश्वासलाई अस्वीकार गर्नु पनि थियो । यसकारण उनीहरुले प्रकोपबाट पीडित हुने कुरोको सम्भावनालाई पनि

فَكَذَّبُوهُ فَأَهْلَكْنَاهُمْ إِنَّ فِي ذَٰلِكَ لَآيَةً وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿١٣٩﴾

(१३९) किनकि 'आद' का समुदायले (आदरणीय) हूदलाई झुठ्लाए, यसकारण हामीले उनीहरुलाई ध्वस्त गरिदियौं,[1] निःसन्देह त्यसमा निशानी छ, तथा उनीहरुमा अधिकतर ईमान भएका थिएनन्।

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿١٤٠﴾

(१४०) तथा निःसन्देह तपाईंको प्रभु प्रभावशाली दयालु हो।

كَذَّبَتْ ثَمُودُ الْمُرْسَلِينَ ﴿١٤١﴾

(१४१) 'समूद' का समुदायका मानिसहरुले[2] पनि पैग़म्बरलाई झुठ्लाए।

अस्वीकार गऱ्यो। किनकि अल्लाहको प्रकोपको सम्भावना त्यसलाई हुन्छ, जो अल्लाहलाई मान्ने हुन्छ तथा निर्णायक दिनलाई स्वीकार गर्नेहुन्छ।

[1]आदको समुदाय संसारको अत्यन्त सुदृढ एवं अत्यन्त शक्तिशाली समुदाय थियो, जसका विषयमा अल्लाहले भन्नुभयो :

﴿الَّتِي لَمْ يُخْلَقْ مِثْلُهَا فِي الْبِلَادِ﴾

"त्यस जस्तो समुदाय पैदा नै गरिएन।" (सूरः अल-फज्र-८)

अर्थात् जो शक्ति एवं अत्यन्त बल तथा स्फूर्तिमा त्यस जस्तो होस्। यसैकारण उनीहरु भन्ने गर्दथे : ﴿مَنْ أَشَدُّ مِنَّا قُوَّةً﴾

"को शक्तिमा हामीभन्दा अधिक छ ?" (सूरः हा.मीम.अस्सजदः-१५)

तर जब त्यस समुदायले पनि कुफ्रको मार्ग त्यागेर ईमान तथा अल्लाहको भयको मार्ग अपनाएनन् ? त अल्लाह तआलाले प्रचण्ड वायुहरुका रुपमा उनीमाथि प्रकोप उताऱ्यो, जुन उनीमाथि पुरै सात राति तथा आठ दिनसम्म निरन्तर आच्छादित रहयो। तीव्र गतिको हावा आउँथ्यो तथा मानिसलाई उडाएर माथि लैजान्थ्यो अनि टाउको तल पारी धर्तीमा बजारिदिन्थ्यो। जसबाट उनका टाउका फुट्थ्यो, तथा टाउको नभएका उनका लासहरु यस्तो परेको हुन्थ्यो मानौं धर्तीमा ख़जूरका खोक्ला रुखहरु ढलेका होऊन्। उनीहरुले पर्वत गुफा तथा घाटीहरुमा ठूला सुदृढ भवन बनाएका थिए, पिउनका लागि पानीका गहिरा इनारहरु खनेका थिए, बग़ैंचा अधिक संख्यामा थिए। परन्तु जब अल्लाहको प्रकोप आयो त कुनै कुरो उनको काम आएन तथा उनलाई सधैंका लागि धर्तीबाट मेटाइयो।

[2]समूदको निवास स्थान 'हिज़र' को क्षेत्र थियो जुन हिजाज़को उत्तर दिशामा छ। आजकल त्यसलाई 'मदायेन स्वालेह' भन्दछन्। (ऐसरुत्तफ़ासीर) यिनी अरब थिए। नबी सल्लल्लाहु अलैहि वसल्लम तबूक जाँदाखेरि ती बस्तीहरुबाट भएर

اِذْ قَالَ لَهُمْ اَخُوْهُمْ صٰلِحٌ اَلَا تَتَّقُوْنَ ۝

(१४२) जब उनका भाई 'स्वालेह' ले उनीसित भने कि के तिमी अल्लाहसित तर्सन्नौ ?

اِنِّيْ لَكُمْ رَسُوْلٌ اَمِيْنٌ ۝

(१४३) म तिम्रा लागि अल्लाहको अमानतदार (विश्वसनीय) पैग़म्बर हूँ ।

فَاتَّقُوا اللّٰهَ وَ اَطِيْعُوْنِ ۝

(१४४) तसर्थ तिमी अल्लाहसित तर्स तथा मैले भने अनुसार गर ।

وَمَآ اَسْـَٔلُكُمْ عَلَيْهِ مِنْ اَجْرٍ اِنْ اَجْرِيَ اِلَّا عَلٰى رَبِّ الْعٰلَمِيْنَ ۝

(१४५) तथा म त्यसको निम्ति तिमीसित कुनै पारिश्रमिक माँगिदन, मेरो पारिश्रमिक त सर्वलोकको प्रभुकै जिम्मामा छ ।

اَتُتْرَكُوْنَ فِيْ مَا هٰهُنَآ اٰمِنِيْنَ ۝

(१४६) के ती वस्तुहरुमा जो यहाँ छन् तिमी शान्तिसँग छाडिदिइने छौ ?[1]

فِيْ جَنّٰتٍ وَّ عُيُوْنٍ ۝

(१४७) (अर्थात्) के ती बगैंचा एवं स्रोतहरुमा ।

وَّ زُرُوْعٍ وَّ نَخْلٍ طَلْعُهَا هَضِيْمٌ ۝

(१४८) तथा ती खेत एवं ती खजूरहरुका बगैंचामा जसका गुच्छाहरु (बोझका कारण) लच्किन्छन् ।[2]



जानुभएको थियो, जस्तो कि अघि वर्णन भइसकेको छ ।

[1]अर्थात् यी सुख के तिमीलाई सधैं प्राप्त रहनेछन्, न तिम्रो मृत्यु हुनेछ न यातना ? प्रश्न नकारात्मक तथा चेतावनीको लागि छ अर्थात यस्तो हुनेछैन बरु प्रकोप अथवा मृत्युद्वारा, जब अल्लाहले चाहनेछ, तिमी यी सुखहरुबाट बञ्चित हुनेछौ । यसमा शिक्षा छ कि अल्लाहद्वारा प्रदान गरिएका सुखहरुको कृतज्ञता व्यक्त गर तथा त्यसमा विश्वास गर तथा चेतावनी छ कि विनाश तिम्रो भाग्यमा छ ।

[2]यो ती सुखहरुको वर्णन हो जुन उनलाई प्राप्त थिए, طَلْع खजूरका ती गुच्छाहरुलाई भन्दछन् जो प्रथम फसलमा निस्कन्छ अर्थात विकसित हुन्छ त्यसको पश्चात खजूरको फल بلح अनि بُسْر अनि رُطَب तथा त्यसका पश्चात تَمر भनिन्छ । (ऐसरुत्तफ़ासीर) बगैंचाहरुमा अन्य फलहरुका साथ खजूरको फल पनि आउँछ । परन्तु अरबहरुमा खजूरको बडो महत्व छ यसकारण यसको विशेषरुपले पनि

وَتَنۡحِتُونَ مِنَ ٱلۡجِبَالِ بُيُوتٗا فَٰرِهِينَ ١٤٩

(१४९) तथा तिमी पर्वतहरुलाई काटेर (सुन्दर) आकर्षक भवनहरुको निर्माण गरिरहेका छौ ।[1]

فَٱتَّقُواْ ٱللَّهَ وَأَطِيعُونِ ١٥٠

(१५०) अत: अल्लाहसित तर्स तथा मेरो अनुकरण गर ।

وَلَا تُطِيعُوٓاْ أَمۡرَ ٱلۡمُسۡرِفِينَ ١٥١

(१५१) तथा सीमा उल्लंघन गर्नेहरुको[2] अनुकरणबाट रोकिइहाल ।

ٱلَّذِينَ يُفۡسِدُونَ فِي ٱلۡأَرۡضِ وَلَا يُصۡلِحُونَ ١٥٢

(१५२) जो धर्तीमा उपद्रव मच्चाइराखेका छन् तथा सुधार गर्दैनन् ।

قَالُوٓاْ إِنَّمَآ أَنتَ مِنَ ٱلۡمُسَحَّرِينَ ١٥٣

(१५३) (उनीहरु) भने कि तिमी त उनीहरुमध्ये हौ जसमाथि जादू गरिएको छ ।

مَآ أَنتَ إِلَّا بَشَرٞ مِّثۡلُنَا فَأۡتِ بِـَٔايَةٍ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ١٥٤

(१५४) तिमी त हामी जस्तै मुनष्य हौ । यदि तिमी साँचोमध्ये हौ भने कुनै चमत्कार ल्याउ ।

قَالَ هَٰذِهِۦ نَاقَةٞ لَّهَا شِرۡبٞ وَلَكُمۡ شِرۡبُ يَوۡمٖ مَّعۡلُومٖ ١٥٥

(१५५) (उहाँले) भन्नुभयो यो हो ऊँटनी । पानी पिउने एउटा पालो यसको तथा एक निर्धारित दिनको पानी पिउने पालो तिम्रो ।[3]

वर्णन गरियो । هضيم का अन्य पनि कैयन् अर्थ वर्णन गरिएका छन् । जस्तै सुन्दर, तथा कोमल पत्रमाथि पत्र आदि ।

[1] فارهين अर्थात् आवश्यकताभन्दा अधिक बनावटी, कारीगरी तथा कलात्मक प्रदर्शन गर्दै अथवा घमण्ड, तथा गर्व गर्दै । जस्तो आजभोलिका मानिसहरुको जस्तो दशा छ । आज पनि भवनहरुमा अनावश्यक कलाकृतिहरुको अत्याधिक प्रदर्शन भइराखेको छ तथा त्यसद्वारा एक-अर्कामाथि श्रेष्ठता तथा गर्व एवं घमण्डको प्रदर्शन पनि ।

[2] مسرفين सित तात्पर्य ती धनवान तथा मुखिया जो कुफ्र तथा शिर्कको प्रचार-प्रसार गर्ने तथा सत्यको विरोध गर्नमा अग्रणीय थिए ।

[3] यो त्यही ऊँटनी थियो जो उनको माग भए बमोजिम पत्थरका चट्टानबाट चमत्कारको रुपमा निस्केको थियो । एकदिन ऊटनीका लागि तथा एक दिन उनका लागि पानी निर्धारित गरिएको थियो, तथा उनीसित भनिएको थियो कि जुन दिन तिम्रो पानीको पालो हुनेछ ।

وَلَا تَمَسُّوهَا بِسُوٓءٍ فَيَأۡخُذَكُمۡ عَذَابُ يَوۡمٍ عَظِيمٍ ﴿١٥٦﴾

(१५६) तथा सावधान यसलाई कष्ट पुऱ्याउने हेतु हात नलगाउनु, अन्यथा एउटा ठूलो दिनको प्रकोपले तिमीलाई समातिहाल्नेछ ।

فَعَقَرُوهَا فَأَصۡبَحُواْ نَٰدِمِينَ ﴿١٥٧﴾

(१५७) तैपनि उनीहरुले त्यसका खुट्टा काटिहाले, अनि तिनीहरु पश्चाताप गर्नेहरु भए ।

فَأَخَذَهُمُ ٱلۡعَذَابُۚ إِنَّ فِي ذَٰلِكَ لَأٓيَةٗۖ وَمَا كَانَ أَكۡثَرُهُم مُّؤۡمِنِينَ ﴿١٥٨﴾

(१५८) तथा प्रकोपले उनीहरुलाई आई समात्यो । नि:सन्देह यसमा शिक्षा छ । तथा उनीहरुमध्ये अधिकतर ईमान भएका थिएनन् ।

وَإِنَّ رَبَّكَ لَهُوَ ٱلۡعَزِيزُ ٱلرَّحِيمُ ﴿١٥٩﴾

(१५९) तथा नि:सन्देह तपाईंको प्रभु अत्यन्त शक्तिशाली एवं दयालु छ ।

---

त्यसदिन ऊटनी घाटामा आउने छैन तथा जुनदिन ऊटनीको पानी पिउने दिन हुनेछ, तिमीलाई घाटमा जानुको आज्ञा छैन ।

[1]दोस्रो कुरा उनीहरुसित यो भनियो कि कोही पनि ऊटनीलाई कुविचारले हात नलगाओस्, न उसलाई हानि पुऱ्याओस् । अत: यो ऊटनी यसप्रकार उनीहरुका बीच रहयो । घाटबाट पानी पिउँथ्यो तथा घाँस-चारा खाएर निर्वाह गर्दथ्यो तथा भनिन्छ कि समूदका समुदायका मानिसहरुले त्यसको दूध दुहन्थे तथा त्यसबाट लाभ उठाउँथे । परन्तु केही समय व्यतीत भए पश्चात उनीहरुले त्यसलाई मार्नुको योजना बनाए ।

[2]अर्थात् यस कुराको उपरान्त कि त्यो ऊटनी अल्लाहको सामर्थ्यको एक प्रतीक एवं पैग़म्बरको सत्यताको प्रमाण थियो, समूदका समुदायका मानिसहरु ईमान कायम गरेनन् तथा कुफ्र तथा शिर्कको मार्गमा अग्रसर रहे तथा उनको अवहेलना यहाँसम्म बढ्यो कि अल्लाहको जीवित प्रतीक ऊटनीका खुट्टा घायल पारिदिए, जसको कारण त्यो बसिहाल्यो तथा पछि त्यसलाई मारिहाले ।

[3]यो त्यस समय भयो जब ऊटनीको हत्या पश्चात आदरणीय स्वालेहले भने कि अब तिमीलाई तीन दिनको अवसर छ, चौथो दिन तिमीलाई सत्यनाश गरिदिइनेछ । त्यसको पश्चात जब वास्तवमा प्रकोपका लक्षण प्रकट हुनथाले, त पछि उनीहरुको तर्फबाट पनि खेदको प्रदर्शन हुनथाल्यो । परन्तु प्रकोपका लक्षण देखिहाले पश्चात खेद प्रकट गर्नु तथा क्षमा माँग्नुको कुनै लाभ छैन ।

[4]यो प्रकोप धर्तीबाट भूकम्प तथा माथिबाट अति तीब्र चित्कारको रुपमा आयो, जसबाट सबै मरिहाल्यो ।

كَذَّبَتْ قَوْمُ لُوطٍ الْمُرْسَلِينَ ﴿١٦٠﴾

(१६०) लूतका समुदायले[1] पनि नबीहरुलाई भुठ्लाए।

إِذْ قَالَ لَهُمْ أَخُوهُمْ لُوطٌ أَلَا تَتَّقُونَ ﴿١٦١﴾

(१६१) जब उनीसित उनका भाइ लूतले भने कि तिमी अल्लाहसित भय गर्दैनौं ?

إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٦٢﴾

(१६२) म तिम्रा लागि अमानतदार रसूल हूँ।

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١٦٣﴾

(१६३) अत: तिमी अल्लाह (तआला) सित तर्स तथा मेरो अनुसरण गर।

وَمَا أَسْأَلُكُمْ عَلَيْهِ مِنْ أَجْرٍ إِنْ أَجْرِيَ إِلَّا عَلَىٰ رَبِّ الْعَالَمِينَ ﴿١٦٤﴾

(१६४) तथा म तिमीसित त्यसको कुनै पारिश्रमिक माँग्दिन, मेरो पारिश्रमिक त केवल सबलोकको पालनकर्तासित छ।

أَتَأْتُونَ الذُّكْرَانَ مِنَ الْعَالَمِينَ ﴿١٦٥﴾

(१६५) के संसारका मानिसहरुमध्ये तिमी नै पुरुषहरुका पास गमन गर्दछौ।

وَتَذَرُونَ مَا خَلَقَ لَكُمْ رَبُّكُمْ مِنْ أَزْوَاجِكُمْ ۚ بَلْ أَنْتُمْ قَوْمٌ عَادُونَ ﴿١٦٦﴾

(१६६) तथा तिम्रा जुन स्त्रीहरुलाई अल्लाह (तआला) ले तिम्रा पत्नी बनाएको छ, उनलाई छाडिदिन्छौ,[2] कुरो यो छ कि तिमी छौ नै

[1]आदरणीय लूत, आदरणीय इब्राहीमका भाइ हारान बिन आज़रका पुत्र थिए। उनलाई आदरणीय इब्राहीमका जीवनकालमा नै नबी बनाएर पठाइएको थियो। उनको समुदाय 'सदूम' तथा 'अमुरया' मा निवास गर्दथ्यो। यी वस्तीहरु सीरियाका क्षेत्रमा थिए।

[2]यो लूतका समुदायका मानिसहरुको अत्यन्त नराम्रो बानी थियो, जसको प्रारम्भ यसै समुदायबाट भएको थियो, यसकारण यस कुकर्मलाई अरबी भाषामा لواطة (लवातत) भनिन्छ अर्थात त्यो कुकर्म जसको प्रारम्भ लूतका समुदायबाट भयो। परन्तु अब यो कुकर्म सम्पूर्ण संसारमा सामान्य रुपले व्याप्त छ, बरु यूरोपीय देशहरुमा यसलाई वैधानिक मान्यता प्राप्त छ अर्थात् उनीकहाँ अब यो पाप रहेन। जुन समाजको व्यवहार यति बिग्रिसकेको हुन्छ कि स्त्री-पुरुषका अनुचित शारीरिक सम्बन्ध (जबकि त्यो दुबैको आपसी प्रसन्नताले हुन्छ) उनका निकट अपराध छैन त दुई पुरुषहरुका आपसी कुकर्म गर्नु कुन प्रकारले पाप तथा अमान्य हुनसक्दछ ?

सीमा उल्लंघन गर्नेहरु ।[1]

(१६७) (उनीहरुले) उत्तर दिए कि हे लूत ! यदि तिमी रोकिएनौ भने अवश्य निकालिदिइनेछौ ।[2]

قَالُوا لَئِن لَّمْ تَنتَهِ يَا لُوطُ لَتَكُونَنَّ مِنَ الْمُخْرَجِينَ ﴿١٦٧﴾

(१६८) (उहाँले) भन्नुभयो कि म तिम्रा कर्मसित अत्याधिक खिन्न छु ।[3]

قَالَ إِنِّي لِعَمَلِكُم مِّنَ الْقَالِينَ ﴿١٦٨﴾

(१६९) मेरा प्रभु ! मलाई तथा मेरा परिवार लाई यस (दुष्कर्म) बाट बचाइहाल जुन यिनीहरु गर्दछन् ।

رَبِّ نَجِّنِي وَأَهْلِي مِمَّا يَعْمَلُونَ ﴿١٦٩﴾

(१७०) अत: हामीले उसलाई तथा उसका सम्बन्धीहरु सबैलाई बचाइहाल्यौं ।

فَنَجَّيْنَاهُ وَأَهْلَهُ أَجْمَعِينَ ﴿١٧٠﴾

(१७१) एक बृद्धा बाहेक कि त्यो पछि पर्नेहरु मध्यकी भइहाली ।[4]

إِلَّا عَجُوزًا فِي الْغَابِرِينَ ﴿١٧١﴾

(१७२) अनि हामीले (शेष) अन्य सबैलाई नाश गरिदियौं ।

ثُمَّ دَمَّرْنَا الْآخَرِينَ ﴿١٧٢﴾

---

[1] عَادُون बहुवचन हो عاد को अरबी भाषामा عاد को अर्थ हो सीमाको उल्लंघन गर्ने व्यक्ति । अर्थात् सत्यलाई छाडी असत्य तथा उचित (हलाल) लाई छाडी अनुचित (हराम) लाई अपनाउने मानिस । अल्लाह तआलाले धार्मिक विधानले गरिएका विवाहद्वारा स्त्रीको भोगबाट आफ्नो काम इच्छाको तृप्ति गर्नलाई औचित्य (हलाल) प्रदान गरेको छ तथा यसका निम्ति पुरुषका गुदाद्वारलाई निषेध (हराम) । लूतका समुदायले स्त्रीहरुको भोग छाडेर पुरुषका गुदाद्वारलाई यस कामका लागि प्रयोग गरे र यसप्रकार सीमा उल्लंघन गरे ।

[2]अर्थात् आदरणीय लूतका भाषण तथा शिक्षाहरुको उत्तरमा उसले भन्यो तिमी बडो पवित्र बन्दै हिंडेका छौ । याद राख ! यदि तिमी आफ्नो यस कार्यबाट रोकिएनौं भने हामीले तिमीलाई बस्तीमा बस्न दिने छैनौं । आज पनि कुकर्मीहरुको यति प्रभाव छ कि सत्कर्म मुख लुकाएर हिंड्छ तथा सत्कर्मीहरुका लागि जीवन व्यतीत गर्नु कष्टदायक बनाइयो ।

[3]अर्थात् म यसलाई प्रिय ठान्दिन तथा यसबाट अत्यन्त दुखी छु ।

[4]यसबाट तात्पर्य लूतकी बृद्धा पत्नी हुन् जो मुसलमान भएकी थिइनन्, अत: तिनी पनि आफ्नो समुदायका साथ ध्वस्त गरिइन् ।

وَ اَمۡطَرۡنَا عَلَیۡهِمۡ مَّطَرًا ۚ فَسَآءَ مَطَرُ الۡمُنۡذَرِیۡنَ ﴿۱۷۳﴾

(१७३) तथा हामीले उनीमाथि एक विशेष प्रकारका वर्षा गर्‍यौं, त्यो अत्यन्त नराम्रो वर्षा थियो जो सचेत गराइएको मानिसहरुमाथि वर्षियो ।[1]

اِنَّ فِیۡ ذٰلِكَ لَاٰیَةً ؕ وَ مَا كَانَ اَكۡثَرُهُمۡ مُّؤۡمِنِیۡنَ ﴿۱۷۴﴾

(१७४) अवश्य यसमा पनि सर्वथा शिक्षाप्रद छ । उनीहरुमध्ये पनि अधिकतर मुसलमान थिएनन् ।

وَ اِنَّ رَبَّكَ لَهُوَ الۡعَزِیۡزُ الرَّحِیۡمُ ﴿۱۷۵﴾

(१७५) निःसन्देह तिम्रो प्रभु त्यही हो प्रभावी दयालु ।

كَذَّبَ اَصۡحٰبُ لۡـَٔیۡكَةِ الۡمُرۡسَلِیۡنَ ﴿۱۷۶﴾

(१७६) एयका मानिसहरुले[2] पनि रसूलहरुलाई झुठ्लाए ।

اِذۡ قَالَ لَهُمۡ شُعَیۡبٌ اَلَا تَتَّقُوۡنَ ﴿۱۷۷﴾

(१७७) जबकि उनीसित शोएबले भने कि के तिमीलाई (अल्लाहको) भय तथा त्रास छैन ?

---

[1]अर्थात् चिन्हित रोडा-ढुङ्गाको वर्षाले हामीले उनलाई नाश गरिदियौं र उनका वस्तीहरुलाई उनीमाथि पल्टाइदियौं, जस्तो कि सूरः हूद-८२ तथा ८३ मा वर्णन भयो ।

[2] أيكـة वन तथा जङ्गललाई भन्दछन् । यसबाट आदरणीय शोएबको समुदाय एवं वस्ती मदयनका निकटवर्ती क्षेत्रका निवासीहरुसित तात्पर्य छ । तथा भनिन्छ कि أيكـة को अर्थ घना वृक्ष तथा यस्तो एउटा वृक्ष मदयनका निकटवर्ती क्षेत्रको आवादीमा थियो, जसको पूजा-पाठ हुन्थ्यो । त्यहाँका वासिन्दाहरुलाई أصحاب الأيكة भनिएको छ । यस आधारमा ऐकाका मानिसहरु तथा मदयनका निवासीहरुका पैग़म्बर एउटै हुन् अर्थात् आदरणीय शोएब तथा यो एउटै पैगम्बरको समुदाय थियो । أيكة किनभने समुदाय होइन, बरु वृक्ष थियो यसकारण भाइको सम्बन्धमा आदरणीय शोएबको नाम लिइएको छैन, जुनप्रकार अन्य अम्बियाको विषयमा छ, परन्तु जहाँ मदयनका साथ आदरणीय शोएबको नाम लिइएको छ त्यहाँ उनको सम्बन्ध भाईको रुपमा व्यक्त गरिएको पाइन्छ, किनभने मदयन समुदायको नाम हो ।﴿وَإِلَىٰ مَدْيَنَ أَخَاهُمْ شُعَيْبًا﴾ (सूरः अल-आराफ़-८५) केही व्याख्याकारहरुले ऐकाका वासिन्दा तथा मदयनलाई अलग-अलग वस्तीहरु भनी भनेका छन् कि यी दुबै भिन्न समुदाय हुन्, जसतिर क्रमश आदरणीय शोएबलाई पठाइयो । एक पटक मदयनतिर तथा दोस्रो पटक ऐकावालाहरुतिर । (परन्तु इमाम इब्ने क़सीरले भनेका छन् कि उचित कुरो यही छ कि यो एउटै सम्प्रदाय हो أوفوا الكيل و الميزان को जुन भाषण मदयनका निवासीहरुलाई दिइयो, यही भाषण यहाँ ऐकावालाहरुलाई गरिदैछ, जसबाट साफ स्पष्ट छ कि यो एउटै सम्प्रदाय हो दुईटा होइन ।

إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٧٨﴾

(१७८) म तिम्रा लागि अमानतदार रसूल हूँ ।

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١٧٩﴾

(१७९) तसर्थ तिमी अल्लाहसित तर्स तथा मेरो आज्ञाको पालना गर ।

وَمَا أَسْأَلُكُمْ عَلَيْهِ مِنْ أَجْرٍ إِنْ أَجْرِيَ إِلَّا عَلَىٰ رَبِّ الْعَالَمِينَ ﴿١٨٠﴾

(१८०) तथा म त्यसको निम्ति तिमीसित कुनै पारिश्रमिक माँग्दिन, मेरो पारिश्रमिक समस्त लोकका प्रभुको जिम्मामा छ ।

أَوْفُوا الْكَيْلَ وَلَا تَكُونُوا مِنَ الْمُخْسِرِينَ ﴿١٨١﴾

(१८१) नाप-तौल पूरा गर र कम दिनेहरुमा सम्मिलित नहोउ ।[1]

وَزِنُوا بِالْقِسْطَاسِ الْمُسْتَقِيمِ ﴿١٨٢﴾

(१८२) तथा सोझो (सही) तराजूसित जोख्ने गर ।[2]

وَلَا تَبْخَسُوا النَّاسَ أَشْيَاءَهُمْ وَلَا تَعْثَوْا فِي الْأَرْضِ مُفْسِدِينَ ﴿١٨٣﴾

(१८३) तथा मानिसहरुलाई उनका वस्तुहरु कमी गरी नदेउ,[3] र (निर्भय भई) धर्तीमा उपद्रव मच्चाउँदै नहिंड ।[4]

وَاتَّقُوا الَّذِي خَلَقَكُمْ وَالْجِبِلَّةَ

(१८४) तथा त्यस (अल्लाह) को भय गर जसले

[1]अर्थात् तिमी जब मानिसहरुलाई जोखेर दिन्छौ त त्यसैप्रकार पूरा देउ, जुनप्रकार लिंदाखेरि तिमी पूरा जोखेर लिन्छौ । लेन-देनका लागि दुई मापदण्ड नराख कि दिंदाखेरि कम देउ तथा लिंदाखेरि पूरा लेउ ।

[2]यसैप्रकार तौलमा डाणी नमार, बरु पूरा सही जोखेर देउ ।

[3]अर्थात् मानिसहरुलाई नाप अथवा तौलमा कमी नगर ।

४अर्थात् अल्लाह तआलाको अवज्ञा नगर, यसबाट धर्तीमा उपद्रव फैलिन्छ । केही ज्ञाताहरुले यसबाट तात्पर्य त्यो डकैती लिएका छन्, जुन यो समुदायले गर्दथ्यो, जस्तो कि अन्य स्थानमा छ ।

﴿ وَلَا تَقْعُدُوا بِكُلِّ صِرَاطٍ تُوعِدُونَ ﴾

"मार्गहरुमा मानिसहरुलाई भयभीत गर्नका लागि नबस ।" (सूर: अल-आराफ़-८६) (इब्ने कसीर)

الْأَوَّلِينَ ﴿١٨٤﴾

स्वयं तिमीलाई तथा पूर्व सृष्टिलाई[1] पैदा गऱ्यो ।

قَالُوٓا۟ إِنَّمَآ أَنتَ مِنَ ٱلْمُسَحَّرِينَ ﴿١٨٥﴾

(१८५) उनीहरुले भने तिमी त उनीहरु मध्येका हौ जसमाथि जादू गरिदिइन्छ ।

وَمَآ أَنتَ إِلَّا بَشَرٌ مِّثْلُنَا وَإِن نَّظُنُّكَ لَمِنَ ٱلْكَٰذِبِينَ ﴿١٨٦﴾

(१८६) तथा तिमी त हामी जस्तै एउटा मनुष्य हौ तथा हामी त तिमीलाई झूठ बोल्नेहरु मध्येकै ठान्दछौं ।[2]

فَأَسْقِطْ عَلَيْنَا كِسَفًا مِّنَ ٱلسَّمَآءِ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ﴿١٨٧﴾

(१८७) यदि तिमी साँचो मानिसहरुमध्ये हौ भने हामीमाथि आकाशको कुनै टुकडा खसालिदेउ ।[3]

قَالَ رَبِّىٓ أَعْلَمُ بِمَا تَعْمَلُونَ ﴿١٨٨﴾

(१८८) उनले (भने) कि मेरा प्रभु राम्ररी जान्दछ जे-जति तिमीहरु गरिराखेका छौ ।[4]

فَكَذَّبُوهُ فَأَخَذَهُمْ عَذَابُ

(१८९) अत: उनीहरुले उसलाई झुठ्याए त उनीहरुलाई

---

[1] جِبِلَّة तथा جِبِلّ सृष्टिको अर्थमा छ, जुनप्रकार अन्य स्थानमा शैतानको विषयमा भनेको छ :

﴿ وَلَقَدْ أَضَلَّ مِنكُمْ جِبِلًّا كَثِيرًا ﴾

यसले अत्याधिक सृष्टिलाई भ्रमित पाऱ्यो । (सूर: यासीन-६२)

यसको प्रयोग ठूलो समूहको लागि हुन्छ । (फ़तहुल क़दीर)

[2] अर्थात् तिमी जुन दावा गर्दछौ कि मलाई अल्लाहले प्रकाशना (वह्य) तथा रिसालतवाट सुशोभित गरेको छ हामी तिमीलाई यस दावामा झुठा ठान्दछौं, किनकि तिमी पनि हामी जस्तै मनुष्य हौ । अनि तिमी यो श्रेष्ठता कसरी प्राप्त गर्न सक्दछौ ?

[3] यो आदरणीय शोएवका शिक्षाहरुको उत्तरमा उनले भने कि यदि तिमी वास्तवमा साँचो हौ, त जाउ हामी तिमीलाई मान्दैनौं, हामीमाथि आकाशको टुक्रा खसालेर देखाउ ।

[4] अर्थात् तिमी जुन कुफ्र तथा शिर्क गरिराखेका छौ, सबै अल्लाहको ज्ञानमा छ तथा त्यसैले यसको पारिश्रमिक तिमीलाई दिनेछ, यदि चाहन्छ भने संसारमा पनि दिइहाल्नेछ, यो यातना तथा दण्ड उसैको अधिकारमा छ ।

يَوْمِ الظُّلَّةِ ۚ إِنَّهُ كَانَ عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿١٨٩﴾

छायाँ भएको दिनको प्रकोपले समातिहाल्यो,[1] त्यो बडो ठूलो दिनको प्रकोप थियो ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿١٩٠﴾

(१९०) निःसन्देह त्यसमा ठूलो निशानी छ तथा त्यसमाका अधिकतर मुसलमान थिएनन् ।

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿١٩١﴾

(१९१) तथा निःसन्देह तिम्रो प्रभु त्यही प्रभावी दयावान छ ।

وَإِنَّهُ لَتَنزِيلُ رَبِّ الْعَالَمِينَ ﴿١٩٢﴾

(१९२) तथा निःसन्देह यो (कुरआन) सम्पूर्ण विश्वका पोषकद्वारा अवतरित गरिएको छ ।

نَزَلَ بِهِ الرُّوحُ الْأَمِينُ ﴿١٩٣﴾

(१९३) यसलाई अमानतदार फरिश्ता लिएर आएको छ ।



[1]उनीहरुले पनि मक्काका मूर्तिपूजकहरुजस्तै आकाशबाट प्रकोप माँगेका थिए, अल्लाहले त्यसअनुसार उनीमाथि प्रकोप पायौ तथा त्यो यसप्रकारका केही कथनहरुका अनुसार सात दिनसम्म उनीहरुमाथि निरन्तर कडा गर्मी तथा धूप रहयो, त्यसका पश्चात बादलहरुको एउटा छायाँ आयो तथा यी सबै गर्मीको व्याकलताबाट बाँच्नका लागि त्यसमुनि एकत्रित भए, तथा केहीले सुखका साँस फेरे परन्तु केही क्षणहरु पश्चात नै आगोका ज्वालाहरु आकाशबाट वर्षन थाले, धर्ती भूकम्पले काम्न थाल्यो तथा तीव्र चित्कारले उनीहरुलाई सधैंका लागि मृत्युको निद्रामा सुताइदियो । यसप्रकार उनीहरुमाथि तीन प्रकारको प्रकोप आयो तथा यो त्यस दिन आयो जुन दिन बादल छायो, यसकारण भन्यो कि छायाँ भएको दिनको प्रकोपले उनीहरुलाई समातिहाल्यो ।

इमाम इब्ने कसीर भन्नुहुन्छ कि अल्लाह तआलाले तीन स्थानमा शोएबका समुदायको विनाशको वर्णन गरेको छ । सूरः अल-आराफ-८८ मा भूकम्पको वर्णन, सूरः हूद-९४ चित्कारको तथा यहाँ शूअरामा आकाशबाट टुक्राहरु खस्नुको । अर्थात तीन प्रकारको प्रकोप यस समुदायमाथि आयो ।

[2]मक्काका मूर्तिपूजकहरुले कुरआनलाई अल्लाहको प्रकाशना तथा अल्लाहको तर्फबाट अवतरित हुने कुरोलाई अस्वीकार गरे तथा यसै आधारमा मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको रिसालत (दूतत्व) तथा आमन्त्रणलाई पनि अस्वीकार गरिदिए । अल्लाह तआलाले नबीहरुका कथाहरुको वर्णन गरी यो स्पष्ट गरिदियो कि यो कुरआन वास्तवमा अल्लाहको प्रकाशना हो तथा मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम अल्लाहका सच्चा रसूल हुन् किनभने यस्तो नभएको भए त यो पैगम्बर जो पढ्न सक्दैनन् तथा

عَلٰى قَلۡبِكَ لِتَكُوۡنَ مِنَ الۡمُنۡذِرِيۡنَ ﴿١٩٤﴾

(१९४) तपाईंको (हृदयमा) (अवतरित भएको छ,)[1] ताकि तपाईं सतर्क गर्नेहरु मध्येबाट हुनुहोस् ।[2]

بِلِسَانٍ عَرَبِيٍّ مُّبِيۡنٍ ﴿١٩٥﴾

(१९५) स्वच्छ अरबी भाषामा छ ।

وَاِنَّهٗ لَفِىۡ زُبُرِ الۡاَوَّلِيۡنَ ﴿١٩٦﴾

(१९६) तथा अघिका नबीहरुका किताबहरुमा पनि यस (कुर्आन) को चर्चा छ ।[3]

اَوَلَمۡ يَكُنۡ لَّهُمۡ اٰيَةً اَنۡ يَّعۡلَمَهٗ عُلَمٰٓؤُا بَنِىۡۤ اِسۡرَآءِيۡلَ ﴿١٩٧﴾

(१९७) के उनीहरुलाई यो निशानी पर्याप्त छैन कि (कुर्आनको सत्यतालाई) त इस्राईलका सन्तानका विद्वान पनि जान्दछन् ।[4]

وَلَوۡ نَزَّلۡنٰهُ عَلٰى بَعۡضِ الۡاَعۡجَمِيۡنَ ﴿١٩٨﴾

(१९८) तथा यदि हामीले कुनै (अरबी भाषीका अतिरिक्त) कुनै गैरअरबी माथि अवतरित गरेको भए ।

न लेख्न सक्छ पूर्वकालिक नबीहरुका घटनाहरु कसरी वर्णन गर्न सक्दछ ? यसकारण यो कुर्आन निश्चित रुपमा सम्पूर्ण जगतका प्रभुकै तर्फबाट अवतरित छ, जसलाई एक अमानतदार फरिश्ता अर्थात् जिब्रील लिएर आए ।

[1]हृदयको विशेषरुपले यसकारण वर्णन गरिएको छ कि शारीरिक अङ्गमा हृदय सबभन्दा अधिक संवेदन एवं स्मरण गर्ने शक्ति राख्दछ ।

[2]यो कुर्आनको अवतरित हुनुको कारण हो ।

[3]अर्थात् जुनप्रकार संसारका अन्तिम पैग़म्बर (रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम) को आगमन तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमका सहगुणहरुका वर्णन अन्य ग्रन्थहरुमा छ, त्यसैप्रकार यस कुर्आनको अवतरण हुने कुरोको शुभ-सूचना ती किताबहरुमा दिइएको थियो । एउटा अन्य अर्थ यो गरिएको छ कि यो कुर्आन मजीद ती आदेशहरुका अनुसार जसमा सबै धर्म विधानहरुमा एकता रहेको छ । आदि ग्रन्थहरुमा पनि विद्यमान रहेको छ ।

[4]किनकि यी किताबहरुमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको तथा कुर्आनको चर्चा विद्यमान छ । यी मक्काका मूर्तिपूजक धार्मिक समस्याहरुमा यहूदीहरुसित विचार-विमर्श गर्दथे । यस आधारमा भन्यो कि के उनीहरु यो कुरा जान्नु तथा भन्नु यस कुराको प्रमाण होइन कि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम अल्लाहका सच्चा रसूल हुन् तथा यो कुर्आन अल्लाहतिरबाट अवतरित गरिएको छ, अनि यी यहूदीहरुको यस कुरालाई स्वीकार गर्दै पैग़म्बरमा ईमान किन कायम गर्दैनन् ?

| | |
|---|---|
| (१९९) त यदि त्यसले उनका समक्ष त्यसको पाठ गर्दथ्यो भने तैपनि त्यसलाई मान्ने थिएन ।[1] | فَقَرَأَهُ عَلَيْهِم مَّا كَانُوا بِهِ مُؤْمِنِينَ |
| (२००) यसैप्रकार हामीले पापीहरुका हृदयमा (इन्कार) लाई सञ्चित गरिदिएका छौं ।[2] | كَذَٰلِكَ سَلَكْنَاهُ فِي قُلُوبِ الْمُجْرِمِينَ |
| (२०१) उनीहरु जबसम्म दुखदायी यातनाको दर्शन गर्दैनन् ईमान ल्याउने छैनन् । | لَا يُؤْمِنُونَ بِهِ حَتَّىٰ يَرَوُا الْعَذَابَ الْأَلِيمَ |
| (२०२) अत: त्यो (यातना) सहसा आइहाल्ने छ र उनीहरुलाई त्यसको अनुमान पनि हुने छैन । | فَيَأْتِيَهُم بَغْتَةً وَهُمْ لَا يَشْعُرُونَ |
| (२०३) त्यस समय भन्नेछन् कि के हामीलाई केही अवसर प्रदान गरिनेछ ?[3] | فَيَقُولُوا هَلْ نَحْنُ مُنظَرُونَ |
| (२०४) त के यिनीहरु हाम्रा प्रकोपको शीघ्रता मच्चाइराखेका छन् ?[4] | أَفَبِعَذَابِنَا يَسْتَعْجِلُونَ |
| (२०५) के तिमीले केही विचार गर्‍यौ ? यदि हामीले उनीहरुलाई केही वर्षसम्म सुख भोग्न दियौं । | أَفَرَأَيْتَ إِن مَّتَّعْنَاهُمْ سِنِينَ |
| (२०६) अनि उनीहरुलाई त्यो (प्रकोप) आइहाल्यो जसबाट उनीहरुलाई तर्साइन्थ्यो । | ثُمَّ جَاءَهُم مَّا كَانُوا يُوعَدُونَ |

[1]अर्थात् अरबी भाषाका अतिरिक्त कुनै अन्य भाषामा अवतरित गर्दथ्यौ भने यिनीहरु भन्थे कि यो त हाम्रो समझमा आउँदैन । जस्तो सूर: हा. मीम. अस्सजदा-४४ मा छ ।

[2]अर्थात् سَلَكْنَاهُ सर्वनाम कुफ्र तथा झुठ्लाउनु एवं इन्कार तथा परिधितिर इंगित गर्दछ ।

[3]परन्तु प्रकोपको दर्शनका पश्चात अवसर प्रदान गरिंदैन, न त्यस समयको क्षमा-याचना नै स्वीकार गरिन्छ । ﴿فَلَمْ يَكُ يَنفَعُهُمْ إِيمَانُهُمْ لَمَّا رَأَوْا بَأْسَنَا﴾ (सूर: अल-मोमिन-८५)

[4]यो उनीहरुको माँगतिर संकेत हो जुन उनीहरु आफ्ना पैगम्बरसित गर्दैआएका छन् कि यदि तिमी साँचो हौ भने प्रकोप ल्याउ ।

مَآ أَغْنَىٰ عَنْهُم مَّا كَانُوا۟ يُمَتَّعُونَ ﴿٢٠٧﴾

(२०७) तथा जुन सुख उनीहरुलाई प्राप्त भएको हुनेछ, त्यो उनीहरुलाई कुनै काम आउने छैन ।[1]

وَمَآ أَهْلَكْنَا مِن قَرْيَةٍ إِلَّا لَهَا مُنذِرُونَ ﴿٢٠٨﴾

(२०८) तथा हामीले कुनै वस्तीलाई ध्वस्त गरेका छैनौं, परन्तु त्यसै अवस्थामा कि त्यसका लागि सचेत गराउनेवाला थिए ।

ذِكْرَىٰ وَمَا كُنَّا ظَٰلِمِينَ ﴿٢٠٩﴾

(२०९) शिक्षाका रुपमा । र हामी अत्याचार गर्नेवाला होइनौं ।[2]

وَمَا تَنَزَّلَتْ بِهِ ٱلشَّيَٰطِينُ ﴿٢١٠﴾

(२१०) तथा यस (कुर्आन) लाई शैतानहरुले ल्याएका होइनन् ।

وَمَا يَنۢبَغِى لَهُمْ وَمَا يَسْتَطِيعُونَ ﴿٢١١﴾

(२११) तथा न उनी यस योग्य छन्, न उनीहरुलाई यसको शक्ति छ ।

إِنَّهُمْ عَنِ ٱلسَّمْعِ لَمَعْزُولُونَ ﴿٢١٢﴾

(२१२) बरु उनीहरु त सुन्नतबाट पनि बञ्चित गरिदिइएका छन् ।

---

[1]अर्थात् यदि हामीले उनीहरुलाई अवसर दिहालौं अनि फेरि उनीहरुलाई आफ्नो यातनाको पकडमा लिऔं त के संसारको धन उनलाई कुनै काम आउने छ, अर्थात् उनीहरुलाई प्रकोपबाट बचाउन सक्नेछ ? निश्चय होइन !

﴿وَمَا هُوَ بِمُزَحْزِحِهِۦ مِنَ ٱلْعَذَابِ أَن يُعَمَّرَ﴾

"उनको हजार वर्षको आयुले उनीबाट यातनालाई हटाउन सक्दैन ।" (सूर: अल-बकर-९६)

﴿وَمَا يُغْنِى عَنْهُ مَالُهُۥٓ إِذَا تَرَدَّىٰٓ﴾

"जब त्यो ध्वस भइहाल्छ त त्यसको धन उसलाई काम आउने छैन ।" (सूर: अल-लयल-११)

[2]अर्थात् रसूल नपठाइकन तथा सावधान नगरिकन यदि हामी कुनै वस्तीलाई ध्वस्त गर्दथ्यौं भने यो अत्याचार हुन्थ्यो, हामीले यस्तो अत्याचार गरेनौं, बरु न्यायका नियम अनुसार प्रथम उनीहरुलाई तर्सायौं तथा त्यस पश्चात जब उनीहरुले पैगम्बरको कुरा मानेनन्, त हामीले उनलाई नाश गरिदियौं । यही विषय सूर: बनी इस्राईल-१५ तथा सूर: अल-कसस-५९ आदिमा पनि वर्णन गरिएको छ ।

यी आयतहरुमा कुर्आनमा, शैतानी हस्तक्षेपबाट सुरक्षित हुनुको वर्णन छ । एक त यसकारण कि शैतानहरुबाट कुर्आन लिएर अवतरित हुनु, उनको योग्य छँदैछैन, किनभने उनको उद्देश्य उपद्रव, आलङ्क तथा नराम्रा कुराको प्रचार-प्रसार

فَلَا تَدْعُ مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ فَتَكُوْنَ مِنَ الْمُعَذَّبِيْنَ ﴿٢١٣﴾

(२१३) अत: तिमी अल्लाहका साथ कुनै अन्य कसैलाई नपुकार जसले कि तिमी पनि दण्ड पाउनेहरु मध्येका होउ ।

وَاَنْذِرْ عَشِيْرَتَكَ الْاَقْرَبِيْنَ ﴿٢١٤﴾

(२१४) तथा आफ्ना निकटवर्ती सम्बन्धीहरुलाई सचेत गर ।[1]

गर्नु हो, जबकि कुर्आनको उद्देश्य पुण्यको आदेश तथा प्रचार तथा नराम्रो कुराहरुबाट बचावका विधिहरुको प्रचार हो । अर्थात दुबै एक-अर्काका विलोम तथा परस्पर विरोधी हुन् । दोस्रो कुरो यो कि शैतान यसको शक्ति नै राख्दैन, तेस्रो यो कि कुर्आन अवतरित हुँदा शैतानहरुलाई यसलाई सुन्नबाट टाढा तथा बञ्चित राखियो । आकाशहरुमा ताराहरुको चौकीदार बनाइएको थियो जुन शैतान पनि माथि जान्थ्यो यी ताराहरु त्यसमाथि बिजुली बनेर खस्थे तथा भस्म गरिदिन्थे । यसप्रकार अल्लाहले कुर्आनलाई सुरक्षित राख्नुको विशेष प्रबन्ध गर्‍यो ।

[1]पैगम्बरहरुको आमन्त्रण मात्र सम्बन्धिहरुसम्म सीमित होइन, बरु सारा समुदायको लागि हुन्छ तथा नबी सल्लल्लाहु अलैहि वसल्लम सम्पूर्ण मानव जातिका लागि मार्गदर्शक एवं निर्देशक बनेर आएका थिए । निकटवर्ती सम्बन्धिहरुलाई ईमानको आमन्त्रण जनसामान्यलाई आमन्त्रण दिनुको विपरीत होइन, बरु त्यसको एक अङ्ग अथवा त्यसको वरीयता प्राप्त पक्ष हो । जुनप्रकार आदरणीय इब्राहीमले सर्वप्रथम एकेश्वरवादको आमन्त्रण आफ्नो पिता आज़रलाई दिएका थिए । यस आदेशका पश्चात नबी सल्लल्लाहु अलैहि वसल्लम 'सफ़ा' पर्वतमा चढे तथा !يَا صَبَاحَاهُ भनेर आवाज दिनुभयो । यो शब्द त्यस समय भनिन्छ, जब शत्रु सहसा आक्रमण गरिदिन्छ, यसद्वारा समुदायका मानिसहरुलाई सतर्क गरिन्छ । यो शब्द सुनेर मानिसहरु एकत्रित भइहाले, उहाँ सल्लल्लाहु अलैहि वसल्लमले कुरैशका प्रत्येक क़बीलाको नाम लिएर भन्नुभयो, "भन ! यदि म तिमीसित यो भन्छु कि यस पर्वतको पछाडी शत्रुको सेना उपस्थित छ, जो तिमीमाथि आक्रमण गर्न गइराखेको छ, त के तिमी मान्नेछौ ?" सबैले उत्तर दिए, "हो, अवश्य हामी मान्नेछौं ।" उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, कि मलाई अल्लाहले सचेत गराउने बनाएर पठाएको छ, म तिमीलाई एउटा अत्यन्त कडा यातनाबाट सावधान गर्दछु, यो सुनेर अबु लहवले भन्यो "تَبًّا لك أما دعوتنا إلا لهـذا" "तिम्रो नाश हो, के तिमीले हामीलाई यसैकारण बोलाएका थियौ ?" (सहीह बुख़ारी तफ़सीर सूर: मसद)

यसपछि सूर: तब्बत यदा अवतरित भयो । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले आफ्नी पुत्री फातिमा, तथा आफ्नी फुफी आदरणीय सफ़ियालाई पनि सम्बोधित गर्नुभयो, तिमी अल्लाहकहाँ बचावको प्रबन्ध गरिहाल, म त्यहाँ तिम्रो काम आउन सक्ने छैन । (सहीह मुस्लिम किताबुल ईमान बाब वा अंजिर अशीरतकल अक़्बीन)

| | |
|---|---|
| (२१५) तथा त्यससँग नम्रताले प्रस्तुत होउ, जो ईमान कायम गरी तिम्रो अधीन हुन्छ । | وَاخْفِضْ جَنَاحَكَ لِمَنِ اتَّبَعَكَ مِنَ الْمُؤْمِنِينَ ﴿٢١٥﴾ |
| (२१६) यदि यिनीहरु तिम्रो अवज्ञा गर्दछन् भने तिमी घोषणा गरिदेउ कि म यी कुराहरुबाट अलग्ग छु जुन तिमी गरिराखेका छौ । | فَإِنْ عَصَوْكَ فَقُلْ إِنِّي بَرِيءٌ مِّمَّا تَعْمَلُونَ ﴿٢١٦﴾ |
| (२१७) तथा आफ्नो पूर्ण विशवास प्रभावशाली कृपालुमाथि गर । | وَتَوَكَّلْ عَلَى الْعَزِيزِ الرَّحِيمِ ﴿٢١٧﴾ |
| (२१८) जो तिमीलाई देखिरहन्छ, जबकि तिमी उभिन्छौ । | الَّذِي يَرَاكَ حِينَ تَقُومُ ﴿٢١٨﴾ |
| (२१९) तथा सजदा (नमन) गर्नेहरुका बीच तिम्रो घुमफिर गर्नु पनि ।[1] | وَتَقَلُّبَكَ فِي السَّاجِدِينَ ﴿٢١٩﴾ |
| (२२०) नि:सन्देह त्यो अत्यन्त श्रोता तथा अत्यन्त ज्ञाता छ । | إِنَّهُ هُوَ السَّمِيعُ الْعَلِيمُ ﴿٢٢٠﴾ |
| (२२१) के म तिमीलाई भनूँ कि शैतानहरु कसमाथि अवतरित हुन्छन् ? | هَلْ أُنَبِّئُكُمْ عَلَىٰ مَن تَنَزَّلُ الشَّيَاطِينُ ﴿٢٢١﴾ |
| (२२२) उनी प्रत्येक झुठा पापीमाथि अवतरित हुन्छन् ।[2] | تَنَزَّلُ عَلَىٰ كُلِّ أَفَّاكٍ أَثِيمٍ ﴿٢٢٢﴾ |
| (२२३) उनीहरु कानमाथि सुनेका कुरा पुऱ्याउन्छन् | يُلْقُونَ السَّمْعَ وَأَكْثَرُهُمْ كَاذِبُونَ ﴿٢٢٣﴾ |

[1]अर्थात् जब तिमी एक्लो हुन्छौ त्यतिखेर पनि अल्लाह देख्दछ तथा जब मानिसहरुमध्ये हुन्छौ त्यतिखेर पनि ।

[2]अर्थात् यस कुर्आनको अवतरणमा शैतानको कुनै हात छैन किनकि शैतान त झुठा तथा पापीहरु (अर्थात् भविष्यवक्ता एवं ज्योतिषिहरु आदि) माथि उत्रन्छन् न कि नबीहरु एवं पुण्य कार्य गर्नेहरुमाथि ।

तथा उनीहरुका अधिकतर झुठा छन् ।[1]

وَالشُّعَرَآءُ يَتَّبِعُهُمُ الْغَاوٗنَ ﴿٢٢٤﴾

(२२४) तथा कविहरुको अनुकरण तिनीहरु नै गर्दछन् जो विचलित भएका हुन्छन् ।

أَلَمْ تَرَ أَنَّهُمْ فِي كُلِّ وَادٍ يَهِيمُونَ ﴿٢٢٥﴾

(२२५) के तपाईंले देख्नु भएन कि घाटीहरुमा भ्रमित भई हिंड्छन् ।[2]

وَأَنَّهُمْ يَقُولُونَ مَا لَا يَفْعَلُونَ ﴿٢٢٦﴾

(२२६) तथा भन्दछन् त्यो जुन गर्दैनन् ।[3]

[1]अर्थात् एकाध कुरा जो कुनै प्रकार उनीहरु सुन्न सफल हुन्छन्, ती भविष्यवक्ताहरुलाई भन्दिन्छन्, जसमा उनीहरु सय झुठा कुरा अलगबाट सम्मिलित गर्दछन् । (जस्तो कि हदीसमा छ, हेर्नुस् सहीह बुखारी किताबुत्त तौहीद, सहीह मुस्लिम किताबुस्सलाम बाब तहरीमुल कहान: व इतयानुल कह्हान) يلقون السمع शैतान आकाशमा सुनिएका केही कुराहरु भविष्यवक्ताहरुलाई पुर्याइदिन्छन्, यस स्थितिमा سمع को अर्थ مسموع हुन्छ, परन्तु यदि यसको अर्थ कानले सुन्नु हो, त अर्थ हुनेछ कि शैतान आकाशहरुमा गई कान थापेर लुकिछिपी केही कुराहरु सुनेर आउँछन्, तथा त्यसपछि तिनलाई भविष्यवक्ताहरुसम्म पुऱ्याइ दिन्छन् ।

[2]अधिकांश कवि यस्ता हुन्छन् जो प्रशंसा एवं भर्त्सनामा नियमको पालन गर्नुको साटो मनगढन्त विचारहरुको प्रदर्शन गर्दछन् । यसका अतिरिक्त त्यसमा अतिश्योक्तिको प्रयोग गर्दछन् तथा कविताको कल्पनामा यताउता भौंतारिन्छन्, यसकारण भन्यो कि यिनका पछि लाग्नेहरु पनि विचलित भएका हुन् । यसप्रकारका कविहरुका लागि हदीसमा भनियो कि, "पेटलाई रगत तथा पीपले भर्नु, जुन त्यसलाई खराब गर्दछ, कविताले भरिनुबाट उत्तम छ ।" (तिर्मिजी अबवाबुल आदाब, मुस्लिम आदि) यहाँ यसको वर्णनको अर्थ यो हो कि हाम्रो पैगम्बर भविष्यवेत्ता अथवा कवि होइन यसकारण कि यी दुबै झुठा हुन् । अत: अन्य स्थानमा पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लम कवि हुने कुराको खण्डन गरिएको छ । जस्तै सूर: यासीन-६९ तथा सूर: अलहाक्क:-४०-४३)

[3]यसबाट ती कविहरुलाई अलग्ग गरिएको छ, जसको कविता सत्य तथा सत्यतामा आधारित छ । तथा यस्ता शब्दहरुबाट अलगाव गरेको छ जसबाट यो स्पष्ट हुन्छ कि ईमान्दार, पुण्यकारी तथा अल्लाहलाई अधिकतर स्मरण गर्ने कवि अनुचित कविता जसमा झुठ तथा अतिश्योक्तिको मिश्रण हुनै सक्दैन । यो उनीहरुकै कार्य हो जो ईमानको गुण विशेषबाट खाली हुन्छन् ।

إِلَّا ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ وَذَكَرُوا۟ ٱللَّهَ كَثِيرًا وَٱنتَصَرُوا۟ مِنۢ بَعْدِ مَا ظُلِمُوا۟ ۗ وَسَيَعْلَمُ ٱلَّذِينَ ظَلَمُوٓا۟ أَىَّ مُنقَلَبٍ يَنقَلِبُونَ ﴿٢٢٧﴾

(२२७) ती होइनन् जो ईमान ल्याए तथा पुण्यका काम गरे तथा अधिक मात्रामा अल्लाह तआलाको प्रशंसाको वर्णन गरे तथा यसका पश्चात जबकि उनीमाथि अत्याचार गरियो त उनले त्यसको प्रतिकार गरे[1]। र जसले अत्याचार गरे उनीहरुलाई छिटै थाहा भइहाल्नेछ कि कुन ठाउँ पल्टन्छन् ।[2]

## سُورَةُ النَّمْلِ

## सूरतुन नमल-२७

सूर: नमल* ८ मक्कामा अवतरित भयो तथा यसका ९३ आयत तथा ७ रुकूअ छन् ।

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु तथा अपार दयालु छ ।



[1]अर्थात् यस्ता ईमान भएका कवि ती काफ़िर कविहरुलाई उत्तर दिन्छन् जसमा उनीहरुले मुसलमानहरुको निन्दा गरेका हुन् । जुनप्रकार आदरणीय हस्सान बिन साबित काफ़िरहरुका आक्षेपित कविताका उत्तर दिने गर्दथे तथा स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लम उनीसित भन्नुहुन्थ्यो कि “यी (काफ़िरहरु) को भर्त्सना गर जिब्रील पनि तिम्रो साथमा छन् ।” (सहीह बुख़ारी किताबु बदइल ख़लक़, बाबु ज़िक्रील मलायक: मुस्लिम फ़ज़ाएल अस्सहाब: बाबु फ़ज़ायल हस्सान बिन साबित) यसबाट ज्ञात भयो कि यस्तो कविता मान्य एवं उचित छ जसमा झुठ तथा अतिश्योक्ति नहोस् तथा जसद्वारा काफ़िर, झूठा मानिसहरुको उत्तर दिइयोस् तथा सत्य पक्ष एवं एकेश्वरवाद तथा सुन्नतको प्रचार-प्रसार गरियोस् ।

[2]अर्थात् أي مرجع يرجعون अर्थात् कुनचाहिं घाट उत्रन्छन् ? तथा त्यो नरक हो । यसमा अत्याचारीहरुका लागि कडा चेतावनी छ । जुनप्रकार कि हदीसमा पनि भनिएको छ तिमी अत्याचारबाट बाँच । यसकारण कि अत्याचार क़ेयामतका दिन अन्धकारको कारण हुनेछ ।” (सहीह मुस्लिम किताबुल बिर्रे, बाब तहरिमिज़ ज़ुल्म)

*नमल अरबी भाषामा कमिलालाई भन्छन् । यस सूर:मा कमिलाहरुको घटनाको वर्णन छ जसले गर्दा यसलाई सूर: नमल भन्दछन् ।

طٰسٓ ۚ تِلْكَ اٰيٰتُ الْقُرْاٰنِ وَكِتَابٍ مُّبِيْنٍ ۙ ①

(१) ता.सीन.,यी आयत हुन् कुरआनका (अर्थात् स्पष्ट) एवं दिव्य ज्योति भएको किताबका ।

هُدًى وَّبُشْرٰى لِلْمُؤْمِنِيْنَ ۙ ②

(२) मार्गदर्शक तथा शुभ-सूचना ईमान भएकाहरुका लागि ।

الَّذِيْنَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَيُؤْتُوْنَ الزَّكٰوةَ وَهُمْ بِالْاٰخِرَةِ هُمْ يُوْقِنُوْنَ ③

(३) जो नमाज़ स्थापित गर्दछन् तथा ज़कात तिर्दछन् तथा आखिरतमा विश्वास गर्दछन् ।[1]

اِنَّ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ زَيَّنَّا لَهُمْ اَعْمَالَهُمْ فَهُمْ يَعْمَهُوْنَ ۗ ④

(४) जुन मानिसहरु केयामतका ईमान ल्याउँदैनन् हामीले उनका लागि उनका कुकर्महरुलाई शोभनीय गरी देखाएका[2] छौं, अतः उनीहरु विचलित भई हिंड्छन् ।[3]

اُولٰٓئِكَ الَّذِيْنَ لَهُمْ سُوْٓءُ الْعَذَابِ وَهُمْ فِى الْاٰخِرَةِ هُمُ الْاَخْسَرُوْنَ ⑤

(५) यी नै त्यसता मानिस हुन् जसका लागि नराम्रो यातना छ तथा आखिरतमा पनि उनी अत्याधिक हानि ग्रस्त छन् ।

[1]यो विषय विभिन्न स्थानहरुमा वर्णित छ कि कुरआन करीम त्यसो त सम्पूर्ण मानव जातिका मार्गदर्शनको लागि अवतरित गरिएको छ, परन्तु यसबाट वास्तवमा मार्गदर्शन उनीहरुलाई नै प्राप्त हुनेछ जो मार्गदर्शन प्राप्त गर्न चाहेनन्, जुन मानिसहरु आफ्ना हृदय तथा मनका झ्यालहरुलाई सत्य देख्न तथा सुन्नबाट बन्द अथवा आफ्ना हृदयहरुलाई पापका अन्धकारहरुबाट बिगारिहाल्नेछन्, कुरआनले उनीहरुलाई कुनप्रकार मार्गमा लगाउन सक्दछ ? उनीहरुको उदाहरण अन्धाहरुको जस्तो छ, जो सूर्यका प्रकाशबाट लाभान्वित हुन सक्दैनन् जबकि सूर्यको प्रकाश सम्पूर्ण जगत्लाई प्रकाशित गर्दछ ।

[2]यो पापहरुको परिणाम तथा प्रतिफल हो कि नराम्रा कुराहरु उनलाई प्रिय लाग्न थाल्छन् तथा आखिरतमाथि ईमानबाट बञ्चित हुनु यसको आधारभूत कारण हो । यसको सम्बन्ध अल्लाहतिर यसकारण गरिएको छ कि प्रत्येक कार्य त्यसको इच्छा तथा आदेशले हुन्छ, तथा यसमा पनि त्यसको त्यही नियम लागू छ, कि पुण्यकारीहरुका लागि पुण्यको मार्ग तथा नराम्राका लागि नराम्रोको मार्ग सरल गरिदिइन्छ । परन्तु यी दुबै मार्गमध्येबाट कुनै एकको निर्वाचित गर्नु यो मनुष्यको आफ्नो इच्छामा आधारित छ ।

[3]अर्थात् विचलनको जुन मार्गमा उनीहरु हिंडिरहेका हुन्छन्, त्यसको वास्तविकतासित उनीहरु परिचित हुँदैनन् तथा सत्य-मार्गतिर पुग्दैनन् ।

وَإِنَّكَ لَتُلَقَّى الْقُرْآنَ مِن لَّدُنْ حَكِيمٍ عَلِيمٍ ﴿٦﴾

(६) तथा निःसन्देह तपाईलाई यो कुरआन एक ठूलो तत्वदर्शी, ज्ञानवान् (प्रभुतिरबाट सिकाइँदैछ)

إِذْ قَالَ مُوسَىٰ لِأَهْلِهِ إِنِّي آنَسْتُ نَارًا سَآتِيكُم مِّنْهَا بِخَبَرٍ أَوْ آتِيكُم بِشِهَابٍ قَبَسٍ لَّعَلَّكُمْ تَصْطَلُونَ ﴿٧﴾

(७) (याद गर,) जबकि मूसाले आफ्ना परिवारका मानिसहरुसित भने कि मैले आगो देखेको छु, म त्यहाँबाट या त कुनै सूचना लिएर अथवा आगोको कुनै बलिराखेको डल्लो लिएर अहिले तिम्रो सामु आउनेछु, ताकि तिमी ताप्न सक ।[1]

فَلَمَّا جَاءَهَا نُودِيَ أَن بُورِكَ مَن فِي النَّارِ وَمَنْ حَوْلَهَا وَسُبْحَانَ اللَّهِ رَبِّ الْعَالَمِينَ ﴿٨﴾

(८) जब त्यहाँ पुगे त आवाज दिइयो कि शुभ होस् त्यो जे त्यस दिव्य ज्योतिमा छ तथा मंगलमय त्यो जो त्यसको छेउ-छाउमा छ, [2] तथा पवित्र छ अल्लाह जो सर्वलोकको प्रभु हो ।[3]



[1]यो त्यस समयको घटना हो जब आदरणीय मूसा मदयनबाट आफ्ना पत्नीलाई साथ लिएर फर्किरहेका थिए, रात्रिको अँध्यारोमा मार्गको ज्ञान थिएन तथा चिसोबाट बचावका लागि अग्निको आवश्यकता थियो ।

[2]टाढाबाट जहाँ आगोको ज्वाला देखिए, त्यहाँ पुगे अर्थात तूर पर्वतमाथि, त देखे कि एउटा हराभरा वृक्षबाट ज्वालाहरु निस्किराखेका छन् । यो वास्तवमा आगो थिएन, अल्लाहको दिव्य-ज्योति थियो, जो अग्नि जस्तै प्रतीत भइराखेको थियो । مَن فِي النَّارِ मा مَنْ बाट तात्पर्य अल्लाह तआला अर्थात त्यसको दिव्य प्रकाश हो तथा من حولها (त्यसका समीप) बाट तात्पर्य मूसा एवं फरिश्ताहरु हदीसमा अल्लाह तआलाका पर्दालाई प्रकाश तथा एउटा कथनमा अग्नि भनिएको छ कि "यदि स्वयंलाई साक्षात प्रकट गरिदिन्छ भने त्यसको प्रताप सम्पूर्ण सृष्टिलाई जलाएर भष्म गरिदिन्छ ।" (सहीह मुस्लिम किताबुल ईमान बाब इन्नल्लाह ला यनामु-फतावा इब्न तैमियः ५: ४६४)

[3]यहाँ अल्लाहको महिमा एवं पवित्रताको अर्थ यो हो कि यस आकाशवाणीबाट यो नबुझियोस् कि यस अग्नि अथवा वृक्षहरुमा अल्लाहले प्रवेश गरेको छ, जस्तो धेरैजसो मूर्तिपूजक ठान्दछन्, यो सत्य प्रदर्शनको एक-प्रकार हो जसबाट नबूअतको प्रारम्भमा नबीहरुलाई सामान्यतः सुशोभित गरिन्छ । कहिले फरिश्ताद्वारा

يٰمُوْسٰٓى اِنَّهٗٓ اَنَا اللّٰهُ الْعَزِيْزُ الْحَكِيْمُ ۙ﴿٩﴾

(९) मूसा ! (सुन,) कुरो यो हो कि म नै अल्लाह हुँ [१] प्रभावशाली तथा तत्वदर्शी ।

وَاَلْقِ عَصَاكَ ۗ فَلَمَّا رَاٰهَا تَهْتَزُّ كَاَنَّهَا جَآنٌّ وَّلّٰى مُدْبِرًا وَّلَمْ يُعَقِّبْ ۗ يٰمُوْسٰى لَا تَخَفْ ۗ اِنِّيْ لَا يَخَافُ لَدَيَّ الْمُرْسَلُوْنَ ۖ﴿١٠﴾

(१०) तथा तिमी आफ्नो लठ्ठी फ्याँक, (मूसाले) जब त्यसलाई चलिराखेको देखे, यसप्रकार कि मानौं त्यो सर्प हो, त पिठ्यूँ फर्काइ भागे तथा मोडिएर पनि हेरेनन्, हे मूसा ! भयभीत नहोउ, [२] मेरा समक्ष पैग़म्बर तर्सने गर्दैनन् ।

اِلَّا مَنْ ظَلَمَ ثُمَّ بَدَّلَ حُسْنًاۢ بَعْدَ سُوْٓءٍ فَاِنِّيْ غَفُوْرٌ رَّحِيْمٌ ﴿١١﴾

(११) परन्तु जुन मानिसहरु अत्याचार गर्दछन्, [३] अनि पछि त्यसको साटो फेरि पुण्य गर्दछन् त्यस कुकर्मका पछाडी त म पनि क्षमाशील, अत्यन्त दयावान छु । [४]

وَاَدْخِلْ يَدَكَ فِيْ جَيْبِكَ تَخْرُجْ بَيْضَآءَ مِنْ غَيْرِ سُوْٓءٍ ۗ فِيْ تِسْعِ اٰيٰتٍ اِلٰى فِرْعَوْنَ وَقَوْمِهٖ ۗ اِنَّهُمْ

(१२) तथा आफ्नो हात आफ्नो खल्तीमा हाल त्यो उज्जवल (तथा प्रकाश भएको) भएर कुनै खराबी [५] बिना निस्कने छ । (तिमी) नौवटा निशानीहरु लिएर फ़िरऔन तथा उसका

तथा कहिले स्वयं अल्लाह तआला आफ्नो दिव्य प्रकाश एवं स्वयं वार्ताबाट, जस्तो कि मूसाकासाथ घटित भयो ।

[१]वृक्षबाट आकाशवाणी हुनु आदरणीय मूसाका लागि आश्चर्यजनक थियो । (अल्लाह तआलाले भन्नुभयो, “मूसा ! आश्चर्य नगर, म नै अल्लाह हुँ ।”

[२]यसवाट ज्ञात भयो कि पैग़म्बरलाई गुप्त कुराहरुको ज्ञान हुँदैन, अन्यथा मूसा आफ्नो हातको लठ्ठीबाट तर्सन्नथे । अर्को कुरो यो कि पैग़म्बरलाई पनि प्राकृतिक भय हुनसक्छ किनभने उनी पनि एउटा मनुष्य नै हुन्छन् ।

[३]अर्थात् अत्याचारीलाई त भय हुनु नै पर्छ कि अल्लाह तआला उसको पकड नगरोस् ।

[४]अर्थात् अत्याचारीको क्षमा पनि स्वीकार गर्दछु ।

[५]अथवा बिना कुष्ठ अथवा कुनै प्रकारको चर्मरोग आदिका । यो लठ्ठीसितको दोस्रो चमत्कार उनलाई प्रदान गरियो ।

كَانُوْا قَوْمًا فٰسِقِيْنَ ⑬

अनुयायीहरुका पासमा (जाउ,)[1] निःसन्देह त्यो कुकर्मीहरुको गुट हो ।

فَلَمَّا جَآءَتْهُمْ اٰيٰتُنَا مُبْصِرَةً قَالُوْا هٰذَا سِحْرٌ مُّبِيْنٌ ⑬

(१३) अतः जब उनको पासमा आँखा खोलिदिने[2] हाम्रा चमत्कार पुगे त उनीहरु भने कि यो त खुल्ला (निरा) जादू हो ।

وَجَحَدُوْا بِهَا وَاسْتَيْقَنَتْهَآ اَنْفُسُهُمْ ظُلْمًا وَّعُلُوًّا ؕ فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُفْسِدِيْنَ ⑭

(१४) तथा उनीहरुले अस्वीकार गरिदिए, यद्यपि उनका हृदय विश्वास गरिसकेका थिए, केवल अत्याचार एवं घमण्डका कारण ।[3] अतः हेरिहाल्नुस् ती उपद्रवीहरुको परिणाम के भयो ?

وَلَقَدْ اٰتَيْنَا دَاوٗدَ وَسُلَيْمٰنَ عِلْمًا ۚ وَقَالَا الْحَمْدُ لِلّٰهِ الَّذِيْ

(१५) तथा हामीले निःसन्देह दाऊद एवं सुलैमानले ज्ञान दिएका थियौं ।[4] तथा दुबैले

[1] فى تسع آيات (नौ चमत्कार) अर्थात् यी दुई चमत्कार ती नौ निशानीहरुमध्ये हुन् जसद्वारा मैले तिम्रो सहायता गरेको हुँ तिनीहरुलाई लिएर फ़िर्औन तथा त्यसका अनुयायीहरुका पासमा जाउ । यी नौं निशानीहरुको विस्तृत जानकारीका लागि हेर्नुस् सूरः बनी इस्राईल आयत १०१ को व्याख्या ।

[2] مُبصرة स्पष्ट तथा प्रभावकारी अथवा यो संज्ञा कर्ता कारकको अर्थमा छ ।

[3] अर्थात् ज्ञान हुनुका उपरान्त जो उनीहरुले अस्वीकार गरे त त्यसको कारण उनको अत्याचार एवं घमण्ड थियो ।

[4] सूरःको प्रारम्भमा आदेश गरिएको थियो कि यो कुर्आन अल्लाहको तर्फबाट सिकाइन्छ, यसका प्रमाणका लागि तूरमाथि आदरणीय मूसाको घटनाको संक्षिप्त वर्णन गऱ्यो तथा अब दोस्रो प्रमाण आदरणीय दाऊद तथा सुलैमानको यो घटना हो । नबीहरुका यी घटनाहरुको वर्णन यस कुराको प्रमाण हो कि परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम अल्लाहका सच्चा रसूल हुन् । ज्ञानबाट तात्पर्य नबूअतको ज्ञानका अतिरिक्त त्यो ज्ञान हो जसबाट आदरणीय दाऊद तथा सुलैमानलाई विशेषरुपले अलंकृत गरिएको थियो जस्तो आदरणीय दाऊदलाई इस्पात उद्योगको ज्ञान, तथा आदरणीय सुलैमानलाई पशुपंक्षीहरुको ज्ञान प्रदान गरिएको थियो । यी दुबै पिता-पुत्रलाई अन्य पनि धेरै कुरा प्रदान गरिएको थियो । परन्तु यहाँ केवल ज्ञानको वर्णन छ जसबाट स्पष्ट हुन्छ कि ज्ञान अल्लाहको सर्वोत्तम उपहार हो ।

فَضَّلَنَا عَلٰى كَثِيْرٍ مِّنْ عِبَادِهِ الْمُؤْمِنِيْنَ ﴿١٥﴾

भने, सबै प्रशंसा त्यस अल्लाहका लागि छ, जसले हामीलाई आफ्ना धेरै ईमान भएका भक्तहरुमाथि श्रेष्ठता प्रदान गरेको छ ।

وَوَرِثَ سُلَيْمٰنُ دَاوٗدَ وَقَالَ يٰۤاَيُّهَا النَّاسُ عُلِّمْنَا مَنْطِقَ الطَّيْرِ وَاُوْتِيْنَا مِنْ كُلِّ شَيْءٍ ۭ اِنَّ هٰذَا لَهُوَ الْفَضْلُ الْمُبِيْنُ ﴿١٦﴾

(१६) तथा दाऊदका उत्तराधिकारी सुलैमान भए,[1] र भन्नलागे हे मानिसहरु ! हामीलाई पंक्षीहरुको बोली सिकाइएको छ ।[2] तथा हामी सबै मध्येबाट दिइएका छौं ।[3] निःसन्देह यो अत्यन्त खुला रुपमा (अल्लाहको) उपकार हो ।

وَحُشِرَ لِسُلَيْمٰنَ جُنُوْدُهٗ مِنَ الْجِنِّ وَالْاِنْسِ وَالطَّيْرِ فَهُمْ يُوْزَعُوْنَ ﴿١٧﴾

(१७) तथा सुलैमानका समक्ष उनका सबै सेना जिन्नात, तथा मनुष्य एवं पंक्षी एकत्रित गरिए,[4] (प्रत्येक प्रकारका) अलग-अलग

---

[1]यसबाट तात्पर्य नबूअत तथा राज्यको उत्तराधिकार हो, जसका उत्तराधिकारी केवल सुलैमान नै भए । अन्यथा आदरणीय दाऊदका अन्य पुत्र पनि थिए, जो यस उत्तराधिकारबाट बञ्चित रहे । त्यसै पनि नबीहरुका उत्तराधिकार ज्ञानमा नै हुन्छ, जुन धन-सम्पत्ति उनी छाडेर जान्छन् त्यो दान हुन्छ, जस्तो कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो । (अल-बुख़ारी किताबुल फ़रायेज़, तथा मुस्लिम किताबुल जिहाद)

[2]बोलीहरु त सबै पशुपंक्षीहरुका सिकाइएका थिए, परन्तु पंक्षीहरुको वर्णन विशेषरुपले यसकारण गरेको छ कि पंक्षी छायाँका लागि हरेक समय साथ रहन्थे । तथा केही व्याख्याकार भन्दछन् कि केवल पंक्षीहरुका बोली सिकाइएका थिए तथा कमिलाहरुको पनि पखेटा निस्कन्छन् । यसकारण उनीहरु पनि पंक्षीहरुमा सम्मिलित छन् । (फ़तहुल क़दीर)

[3]जसको उनलाई आवश्यकता थियो, जस्तो ज्ञान, नबूअत, नीति, धन, जिन्नात तथा मनुष्य एवं पशुपंक्षीहरुमाथि प्रभुत्व आदि ।

[4]यसमा आदरणीय सुलैमानको व्यक्तिगत विशेषता तथा महत्वको वर्णन छ, जसमा उनी सम्पूर्ण मानव इतिहासमा सर्वश्रेष्ठ छन्, कि उनको राज्य केवल मनुष्यहरुमाथि नै थिएन, वरु जिन्नात पशु एवं पंक्षीहरु यहाँसम्मकि हावालाई पनि उनका अधीन गरिदिइएको थियो, यसमा भनिएको छ कि सुलैमानको सम्पूर्ण सेना अर्थात् जिन्न, मनुष्य तथा पंक्षीहरुलाई एकत्रित गरियो । अर्थात कतै प्रस्थान गर्नका लागि यो सेना एकत्रित गरियो ।

उभ्याइयो ।[1]

حَتّٰۤی اِذَاۤ اَتَوۡا عَلٰی وَادِ النَّمۡلِ ۙ قَالَتۡ نَمۡلَۃٌ یّٰۤاَیُّهَا النَّمۡلُ ادۡخُلُوۡا مَسٰکِنَکُمۡ ۚ لَا یَحۡطِمَنَّکُمۡ سُلَیۡمٰنُ وَ جُنُوۡدُهٗ ۙ وَ هُمۡ لَا یَشۡعُرُوۡنَ ﴿۱۸﴾

(१८) जब उनी कमिलाहरुका मैदानमा पुगे त एउटा कमिलाले भन्यो, हे कमिलाहरु ! आ-आफ्ना घरहरुमा पसिहाल, (यस्तो नहोस् कि) असावधानीका कारण सुलैमान तथा उनका सेनाले तिमीलाई कुल्चिहालून् ।

فَتَبَسَّمَ ضَاحِکًا مِّنۡ قَوۡلِهَا وَ قَالَ رَبِّ اَوۡزِعۡنِیۡۤ اَنۡ اَشۡکُرَ نِعۡمَتَکَ الَّتِیۡۤ اَنۡعَمۡتَ عَلَیَّ وَ عَلٰی وَالِدَیَّ

(१९) त्यसको यो कुरामा (आदरणीय सुलैमान) मुस्कुराएर हाँसे तथा प्रार्थना गर्नथाले कि हे प्रभु ! तिमी मलाई सौभाग्य प्रदान गर कि म तिम्रा यी उपकारीहरुको कृतज्ञता व्यक्त

[1]यो अनुवादलाई विभाजनको अर्थमा लिएर गरिएको छ । अर्थात् सबैलाई अलग-अलग गुटहरुमा विभाजित (श्रेणीका रुपमा) गरिन्थ्यो । जस्तै मनुष्य, तथा जिन्नहरुका गुट पंक्षी एवं पशुहरुका गुट आदि-आदि । यसको अन्य अर्थ हो "अतः उनलाई रोकिने गरिन्थ्यो ।" अर्थात् यो सेना यति ठूलो संख्यामा हुन्थ्यो कि मार्गमा रोकि-रोकि उनीहरुलाई ठीक गरिन्थ्यो कि राज्यको सेना असंगठित एवं विभाजनको शिकार नहोस् । यो وزع बाट छ जसको अर्थ रोक्नुको हो । यस शब्दमा नकारात्मक हम्ज़ा लगाएर त أوزعني बनाइएको छ जो आयत संख्या १९ मा आइराखेको छ, अर्थात यस्ता कुरा मबाट टाढा पारिदेउ, जो मलाई तिम्रा उपकारहरुको कृतज्ञता व्यक्त गर्नबाट रोक्दछ ।

[2]यसबाट यो ज्ञात भयो कि जीवहरुमा एक विशेष प्रकारको संवेदन विद्यमान छ । यद्यपि त्यो मनुष्यभन्दा निकै कम तथा भिन्न छ । दोस्रो यो कि आदरणीय सुलैमान यति महान तथा महत्वपूर्ण व्यक्ति हुनुका पश्चात पनि उनलाई परोक्षको ज्ञान थिएन, यसैकारण कमिलाहरुलाई आभास भयो कि अन्जानमा उनीहरुले तिनीहरुलाई कुल्चिहालून् । तेस्रो यो कि जीव पनि यस सत्य विश्वाससित परिचित थिए कि अल्लाहका अतिरिक्त कोही पनि अप्रत्यक्षको ज्ञान राख्दैन । जस्तो कि आगामी आउने हुदहुद (चरा) को घटनाबाट अझ पुष्टि हुन्छ । चौथो यो कि आदरणीय सुलैमान पंक्षीहरुका अतिरिक्त अन्य जीवहरुका बोली पनि बुझ्दथे । यो ज्ञान अल्लाह तआलाले उनलाई प्रदान गरेको थियो, जुनप्रकार जिन्नात आदिका अधीन चमत्कारिक प्रतिष्ठा थियो चमत्कारका रुपमा ।

وَاَنْ اَعْمَلَ صَالِحًا تَرْضٰىهُ وَاَدْخِلْنِیْ بِرَحْمَتِكَ فِیْ عِبَادِكَ الصّٰلِحِیْنَ ﴿۱۹﴾

गरूँ,[1] जुन तिमीले ममाथि उपकार गरेका छौ। तथा मेरा माता-पितामाथि तथा म यस्ता पुण्यका कार्य गरिरहूँ जसबाट तिमी प्रसन्न रह, तथा मलाई आफ्नो कृपाले आफ्ना पुण्यकारी भक्तहरुमा सम्मिलित गरिहाल।[2]

وَتَفَقَّدَ الطَّیْرَ فَقَالَ مَا لِیَ لَاۤ اَرَی الْهُدْهُدَ ۖ٘ اَمْ كَانَ مِنَ الْغَآىِٕبِیْنَ ﴿۲۰﴾

(२०) तथा उहाँले पंक्षीहरुको निरीक्षण गर्नुभयो र भने यो कुरा हो कि म हुदहुदलाई देखिराखेको छैन ? के वास्तवमा त्यो अनुपस्थित छ ?[3]

لَاُعَذِّبَنَّهٗ عَذَابًا شَدِیْدًا اَوْ لَاَاذْبَحَنَّهٗۤ اَوْ لَیَاْتِیَنِّیْ بِسُلْطٰنٍ مُّبِیْنٍ ﴿۲۱﴾

(२१) निःसन्देह म त्यसलाई कडा दण्ड दिनेछु, अथवा त्यसलाई वध गरिहाल्नेछु अथवा मेरा समक्ष कुनै उचित कारण बताओस्।

فَمَكَثَ غَیْرَ بَعِیْدٍ فَقَالَ اَحَطْتُّ بِمَا لَمْ تُحِطْ بِهٖ وَجِئْتُكَ مِنْ سَبَاٍۭ بِنَبَاٍ

(२२) केही अधिक समय बितेको थिएन कि (आएर उसले भन्यो) म यस्तो कुरोको सूचना ल्याएको छु कि तिमीलाई त्यसको सूचना नै छैन।[4]

[1]कमिलाहरु जस्ता तुच्छ जीवको कुरा सुनेर बुझ्नाले आदरणीय सुलैमानका हृदयमा कृतज्ञता व्यक्त गर्नुको भावना उत्पन्न भयो कि अल्लाहले ममाथि कति उपकार गरेको छ।

[2]यसबाट ज्ञात भयो कि स्वर्ग जो ईमान्दारहरुकै घर हो, यसमा कोही पनि अल्लाहको कृपा बिना प्रवेश गर्न सक्ने छैन। यसैकारण हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : (सोझो तथा सत्यका निकट रह तथा यो कुरा जानीहाल कि कुनै व्यक्ति पनि केवल आफ्ना कर्महरुबाट स्वर्गमा जाने छैनन्। सहावाले सोधे, हे रसूलुल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) पनि ? उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) ले भन्नुभयो : "हो म पनि त्यस समयसम्म स्वर्गमा जाने छैन, जबसम्म अल्लाहको दयाले मलाई आफ्नो छायाँमा ढाक्दैन।" (सहीह बुखारी संख्या ६४६७ तथा मुस्लिम संख्या २८१७)

[3]अर्थात् उपस्थिति त छ, म देखिराखेको छैन अथवा यहाँ उपस्थिति नै छैन।

[4] إحاطة को अर्थ हो कुनै वस्तुका विषयमा पूर्ण ज्ञान तथा परिचय प्राप्त गर्नु।

يَقِيْنٍ ۝٢٢

म 'सबा'[1] को एउटा साँचो सूचना तिम्रो पासमा ल्याएको छु ।

إِنِّي وَجَدتُّ امْرَأَةً تَمْلِكُهُمْ وَأُوتِيَتْ مِن كُلِّ شَيْءٍ وَلَهَا عَرْشٌ عَظِيمٌ ۝٢٣

(२३) मैले देखें कि उनको बादशाह एउटा महिला गरिराखेकी छे,[2] जसलाई हरप्रकारको वस्तुबाट केही न केही प्रदान गरिएको छ तथा उसको सिंहासन पनि बडो भव्य छ ।

وَجَدتُّهَا وَقَوْمَهَا يَسْجُدُونَ لِلشَّمْسِ مِن دُونِ اللَّهِ وَزَيَّنَ لَهُمُ الشَّيْطَانُ أَعْمَالَهُمْ فَصَدَّهُمْ عَنِ السَّبِيلِ فَهُمْ لَا يَهْتَدُونَ ۝٢٤

(२४) मैले उसलाई तथा उसका समुदायलाई अल्लाहलाई छाडी सूर्यको सजदा गर्देरहेको पाएँ, शैतानले उनका कार्य उनलाई राम्रो पारेर देखाइ सत्य-मार्गबाट रोकिदिएको छ ।[3] अत: उनीहरु मार्ग-दर्शनमा आउँदैनन् ।

[1]सबा एक व्यक्तिको नाममा एक समुदायको नाम पनि थियो एवं एक नगरको पनि । यहाँ नगरसित तात्पर्य छ । यो सनआ (यमन) बाट तीन दिनको यात्राको दूरीमा छ तथा मआरिब यमनको नामले प्रसिद्ध छ । (फ़तहुल क़दीर)

[2]अर्थात् हुदहुदका लागि पनि यो कुरा आश्चर्यजनक थियो कि सबामा एउटी स्त्री राज्य गरिराखेकी छे । परन्तु आजभोलि भनिन्छ कि स्त्रीहरु पनि हरेक कुरामा पुरुषहरुका समान छन् । यदि पुरुष राज्य गर्न सक्दछ भने महिला किन गर्न सक्दैन ? जबकि यो दृष्टिकोण इस्लामिक शिक्षाहरुको विपरीत छ । केही मानिसहरु महारानी सबा (बिलकिस) को यस वाक्यसित अर्थ निकाल्दै भन्दछन् कि महिलाको नेतृत्व मान्य छ । यद्यपि कुर्‌आनले एक घटनाको रुपमा यसको वर्णन गरेको छ, यसबाट यसको मान्यता अथवा अमान्यताको कुनै सम्बन्ध नै छैन । महिला नेतृत्वको अमान्यतामा कुर्‌आन तथा हदीसमा स्पष्ट प्रमाण विद्यमान छ ।

[3]यसको अर्थ यो हो कि जुनप्रकार पंक्षीहरुको यो आभास छ नबीहरुलाई अप्रत्यक्षको ज्ञान हुँदैन, जस्तो कि हुदहुदले आदरणीय सुलेमानलाई भन्यो कि यस्तो समाचार ल्याएको छु । والله أعلم

(२५) कि मात्र उसै अल्लाहलाई सज्दा गरून्,[1] जो आकाशहरु तथा धर्तीका गुप्त वस्तुहरुलाई बाहिर निकाल्दछ ।[2] तथा जे-जति तिमी गुप्त राख्दछौ तथा प्रकट गर्दछौ, त्यो सबै जान्दछ ।

أَلَّا يَسْجُدُوا لِلَّهِ الَّذِي يُخْرِجُ الْخَبْءَ فِي السَّمَاوَاتِ وَالْأَرْضِ وَيَعْلَمُ مَا تُخْفُونَ وَمَا تُعْلِنُونَ ﴿٢٥﴾

(२६) (अर्थात्) अल्लाह ! त्यसका अतिरिक्त कोही पूजा योग्य छैन, त्यही विशाल अर्शको प्रभु हो ।[3]

اللَّهُ لَا إِلَٰهَ إِلَّا هُوَ رَبُّ الْعَرْشِ الْعَظِيمِ ﴿٢٦﴾ السجدة

(२७) (सुलैमानले) भने कि अब हामी हेर्नेछौं कि तिमीले सत्य भन्यौ अथवा तिमी भूठा हौ ।

قَالَ سَنَنظُرُ أَصَدَقْتَ أَمْ كُنتَ مِنَ الْكَاذِبِينَ ﴿٢٧﴾

---

जसबाट तपाईं पनि अन्जान हुनुहुन्छ, त्यसैप्रकार उनी अल्लाह एक हुनुको प्रवधि एवं समभ्क पनि राख्दछन् । यसैले हुदहुदले आश्चर्य एवं विस्मयको रुपमा भन्यो कि यो महारानी तथा त्यसका समुदाय अल्लाहका अतिरिक्त सूर्यका पूजारी हुन् तथा शैतानको अनुकरण गरिराखेका छन्, जसले उनका लागि सूर्यको पूजालाई अलंकृत गरी देखाएको छ ।

[1] ألا يسجدوا त्यस को सम्बन्ध पनि زين सित छ । अर्थात् शैतानले यो पनि उनको लागि आकर्षक गरिदिएको छ कि उनी अल्लाहको सजदा नगरून् । अथवा यो لا يهتدون को कारक हो तथा لا अधिक छ । अर्थात् उनको बुद्धिमा यो कुरा आउँदैन कि सजदा त केवल अल्लाहलाई गरून् । (फ़तहुल क़दीर)

[2] अर्थात् आकाशबाट वर्षा गर्दछ तथा धर्तीबाट त्यसका योग्य वनस्पति खनिज एवं अन्य धर्तीका कोष प्रकट गर्दछ तथा निकाल्दछ ।

[3] अल्लाह त सम्पूर्ण सृष्टिको स्वामी हो, परन्तु केवल महान अर्शको वर्णन गऱ्यो, एक त यसकारण कि अल्लाहको सिंहासन (अर्श) सृष्टिको सबभन्दा ठूलो तथा सर्वश्रेष्ठ छ । दोस्रो कुरो यो स्पष्ट गर्नका लागि कि महारानी सबाको राजसिंहासन बहुत ठूलो छ, परन्तु त्यसको महान सिंहासनसित कुनै तुलना नै छैन, जुनप्रकार कि अल्लाह तआला आफ्नो महिमाका अनुसार आसीन छ । हुदहुदले एकेश्वरवादको पक्ष तथा शिर्कको खण्डन गरेको छ, तथा अल्लाहको महिमा तथा प्रशंसाको वर्णन गरेको छ, यसकारण हदीसमा वर्णित छ "चार जीवहरुको हत्या नगर कमिला, माहुरी, हुदहुद तथा लटूरा ।" (मुसनद अहमद भाग-१ पृष्ठ ३३२, अबु दाऊद किताबुल अदब, इब्ने माजा किताबु स्सैयद, बाब मा युन्हा अन कत्लेही) लटूरा, यसको टाउको ठूलो, पेट सेतो तथा पिठयूँ हरियो हुन्छ, यो साना-साना चराहरुको शिकार गर्दछ । (व्याख्या इब्ने कसीर)

اِذْهَبْ بِّكِتٰبِیْ هٰذَا فَاَلْقِهْ اِلَیْهِمْ ثُمَّ تَوَلَّ عَنْهُمْ فَانْظُرْ مَاذَا یَرْجِعُوْنَ ﴿۲۸﴾

(२८) मेरो यस पत्रलाई लगी उनीहरुलाई दिइदेउ, अनि उनका पासबाट हटेर आउ तथा हेर कि उनीहरु के उत्तर दिन्छन् ।[1]

قَالَتْ یٰۤاَیُّهَا الْمَلَؤُا اِنِّیْۤ اُلْقِیَ اِلَیَّ كِتٰبٌ كَرِیْمٌ ﴿۲۹﴾

(२९) त्यसले भनी हे प्रमुखहरु ! मतिर एउटा प्रतिष्ठित पत्र पठाइएको छ ।

اِنَّهٗ مِنْ سُلَیْمٰنَ وَ اِنَّهٗ بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِیْمِ ﴿۳۰﴾

(३०) जो सुलैमानको तर्फबाट छ तथा जो दया गर्ने अत्यन्त कृपालु अल्लाहको नामबाट प्रारम्भ छ ।

اَلَّا تَعْلُوْا عَلَیَّ وَ اْتُوْنِیْ مُسْلِمِیْنَ ﴿۳۱﴾

(३१) यो कि तिमी मेरा समक्ष उद्दण्डता नगर तथा मुसलमान बनेर मेरो पासमा आउ ।[2]

قَالَتْ یٰۤاَیُّهَا الْمَلَؤُا اَفْتُوْنِیْ فِیْۤ اَمْرِیْ ۚ مَا كُنْتُ قَاطِعَةً اَمْرًا حَتّٰی تَشْهَدُوْنِ ﴿۳۲﴾

(३२) त्यसले भनी हे मेरा प्रमुखहरु ! तिमी मेरो यस समस्यामा मलाई परामर्श देउ । म कुनै कुराको अन्तिम निर्णय जबसम्म तिम्रो उपस्थिति एवं राय हुँदैन, गर्दिन ।

قَالُوْا نَحْنُ اُولُوْا قُوَّةٍ وَّ اُولُوْا بَاْسٍ شَدِیْدٍ ۙ۬ وَّ الْاَمْرُ اِلَیْكِ فَانْظُرِیْ

(३३) ती सबैले उत्तर दिए कि हामी शक्तिशाली एवं शक्ति भएका अत्याधिक लड्ने-भिड्नेहरु हौं ।[3] यस अगाडी तपाईंलाई अधिकार छ



[1]अर्थात् एकातिर हटेर लुकिहाल तथा हेर कि उनीहरु आपसमा के वार्तालाप गर्दछन् ।

[2]जस्तो कि नबी सल्लल्लाहु अलैहि वसल्लमलाई पनि राजाहरुलाई पत्र लेख्नु भएको थियो जसमा उनीहरुलाई इस्लाम धर्म स्वीकार गर्नुको आमन्त्रण दिइएको थियो । त्यसैप्रकार आदरणीय सुलैमानले पनि उसलाई पत्रद्वारा इस्लाम धर्म स्वीकार गर्न आमन्त्रण दियो । आजभोलि जसलाई पत्र लेखिन्छ, त्यसको नाम पहिले लेखिन्छ । परन्तु प्राचीन कालको विधि यो थियो, जुन आदरणीय सुलैमानले अपनाएका थिए कि पहिला आफ्नो नाम लेख्यो ।

[3]अर्थात् हाम्रो पासमा शक्ति तथा शस्त्र पनि छन् तथा युद्धका समय वीरतापूर्वक लड्नेहरु पनि छन्, यसकारण झुक्ने तथा दब्ने कुरोको आवश्यकता छैन ।

مَاذَا تَأْمُرِينَ ﴿٣٣﴾

तपाईं स्वयं विचार गर्नुस् कि तपाईं हामीलाई के आदेश दिनुहुन्छ ?[1]

قَالَتْ إِنَّ الْمُلُوكَ إِذَا دَخَلُوا قَرْيَةً أَفْسَدُوهَا وَجَعَلُوا أَعِزَّةَ أَهْلِهَا أَذِلَّةً ۖ وَكَذَٰلِكَ يَفْعَلُونَ ﴿٣٤﴾

(३४) उनले भनिन् कि बादशाह जब कुनै बस्तीमा प्रवेश गर्दछन्,[2] त त्यसलाई उजाड दिन्छन् तथा त्यहाँका सम्मानित मानिसहरुलाई अपमानित गर्दछन् ।[3] तथा यिनीहरुले पनि यस्तै गर्नेछन् ।[4]

وَإِنِّي مُرْسِلَةٌ إِلَيْهِم بِهَدِيَّةٍ فَنَاظِرَةٌ بِمَ يَرْجِعُ الْمُرْسَلُونَ ﴿٣٥﴾

(३५) तथा म उनीहरुलाई उपहार पठाउने भएकी छु, अनि देख्नेछु कि राजदूत के उत्तर लिएर फर्कन्छन् ।[5]

فَلَمَّا جَاءَ سُلَيْمَانَ قَالَ أَتُمِدُّونَنِ بِمَالٍ فَمَا آتَانِيَ اللَّهُ خَيْرٌ مِّمَّا آتَاكُم بَلْ أَنتُم بِهَدِيَّتِكُمْ

(३६) अत: (राजदूत) जब (आदरणीय) सुलेमानको पासमा पुग्यो त उहाँले भन्नुभयो, के तिमी धनबाट मलाई मद्दत दिन चाहन्छौ ?[6] मलाई त मेरो प्रभुले यसभन्दा अत्याधिक प्रदान गरेको छ ।

[1]यसकारण कि हामी त तपाईंको आदेशका अधीन छौं, जो तपाईंको आदेश हुनेछ, पालन गर्नेछौं ।

[2]अर्थात् शक्तिद्वारा विजय प्राप्त गर्दै ।

[3]अर्थात् हत्या तथा लूटपाट गरी बन्दी बनाएर ।

[4]केही व्याख्याकारहरुका निकट यो अल्लाहको कथन हो जो महारानी सबाको पक्षमा छ तथा केहीका निकट यो बिलकीस कै कथन हो तथा यसको विशिष्ट रुप छ एवं यदि पूर्व वाक्यका अधिक निकट छ ।

[5]यसबाट अनुमान भइहाल्नेछ कि सुलेमान कुनै सांसारिक राजा हुन् अथवा अल्लाहद्वारा पठाइएका नबी हुन्, जसको उद्देश्य अल्लाहका धर्मको प्रभुत्व स्थापित गर्नु हो । यदि उपहार स्वीकार गरेन त नि:सन्देह त्यसको उद्देश्य धर्मको प्रचार-प्रसार हो, अनि हामीलाई पनि अनुकरण नगरी कुनै उपाय हुनेछैन ।

[6]अर्थात् तिमी देखिराखेका छैनौं कि अल्लाहले मलाई प्रत्येक वस्तु प्रदान गरेको छ । अनि तिमी आफ्नो उपहारबाट मेरो धन-सम्पत्तिमा के बृद्धि गर्न सक्दछौ ? यो प्रश्न नकारात्मक हो अर्थात् कुनै बृद्धि गर्न सक्दैन ।

تَفْرَحُونَ ۝

जे उसले तिमीलाई दिएको छ, अत: तिमी नै आफ्नो उपहारमा प्रसन्न रह ।[1]

ارْجِعْ إِلَيْهِمْ فَلَنَأْتِيَنَّهُمْ بِجُنُودٍ لَا قِبَلَ لَهُمْ بِهَا وَلَنُخْرِجَنَّهُمْ مِنْهَا أَذِلَّةً وَهُمْ صَاغِرُونَ ۝

(३७) जाउ उनीतिर फर्क[2] हामी उनका पासमा यस्ता सेना ल्याउनेछौं जसका सम्मुख आउनुको शक्ति उनमा छैन तथा हामीले उनीहरुलाई अपमानित एवं पराजित गरी त्यहाँबाट बाहिर निकाल्दिनेछौं ।[3]

قَالَ يَا أَيُّهَا الْمَلَأُ أَيُّكُمْ يَأْتِينِي بِعَرْشِهَا قَبْلَ أَنْ يَأْتُونِي مُسْلِمِينَ ۝

(३८) (उहाँले) भन्नुभयो हे नाइकेहरु ! तिमीमध्ये कोही छ जो उनी मुसलमान भई पुग्नुभन्दा पहिला नै त्यसको सिंहासन मलाई ल्याएर देओस् ।[4]

---

[1]यो चेतावनीको रुपमा छ कि तिमी नै यस उपहारमाथि गर्व गर तथा प्रसन्न होउ, म त यसबाट प्रसन्न हुनेछैन, यसकारण कि एक त सांसारिक लाभ मेरो उद्देश्य होइन । दोस्रो यो कि अल्लाहले मलाई त्यो सबै प्रदान गरेको छ जो सम्पूर्ण संसारमा कसैले प्रदान गरेन । तेस्रो, मलाई नबुअतबाट पनि सुशोभित गरिएको छ ।

[2]यहाँ एक वचनबाट सम्बोधित गर्‍यो, जबकि यसभन्दा पूर्व बहुवचनले सम्बोधित गरेको थियो, किनकि सम्बोधनमा सम्पूर्ण पार्टीलाई ध्यानमा राखिएको छ कहिले नाइकेलाई ।

[3]आदरणीय सुलेमान केवल राज्यसित सम्बन्धित थिएनन्, अल्लाहका पैग़म्बर पनि थिए । यसकारण उनको तर्फबाट मानिसहरुलाई अपमानित गर्न सम्भव थिएन, परन्तु लडाईंको परिणाम यही हुन्छ किनकि युद्ध नाम नै रक्तपात तथा बन्दी बन्नु बनाउनुको हो तथा अपमान तथा अनादरसित तात्पर्य यही हो, अन्यथा अल्लाहका पैग़म्बर मानिसहरुलाई अनायास लज्जित तथा अपमानित गर्दैनन् । जुनप्रकार कि नबी सल्लल्लाहु अलैहि वसल्लमको व्यवहार एवं उत्तम आचार युद्धको अवसरमा रहयो ।

[4]आदरणीय सुलैमानका यस उत्तरबाट महारानीले यो अनुमान लगाईन् कि तिनले सुलैमानको सामना गर्नसक्ने छैनन् । अत: तिनले अधीन एवं अनुयायी बनेर आउनुको तयारी प्रारम्भ गरिन् । आदरणीय सुलैमानलाई पनि तिनको आगमनको सूचना प्राप्त भयो, त उहाँले तिनलाई आफ्नो अधिक चमत्कारिक प्रतिष्ठा देखाउनका लागि योजना बनाउनु भयो तथा तिनी पुग्नुभन्दा पूर्व नै तिनको राजसिंहासन आफ्नो पासमा मँगाउने प्रबन्ध गर्नुभयो ।

قَالَ عِفْرِيْتٌ مِّنَ الْجِنِّ اَنَا اٰتِيْكَ بِهٖ قَبْلَ اَنْ تَقُوْمَ مِنْ مَّقَامِكَ ۚ وَاِنِّيْ عَلَيْهِ لَقَوِيٌّ اَمِيْنٌ ﴿٣٩﴾

(३९) एउटा शक्तिशाली जिन्नले भन्यो, तपाईं आफ्नो यस स्थानबाट[1] उठ्नुभन्दा पूर्व नै म त्यसलाई तपाईंको पासमा ल्याइदिन्छु ।[2] विश्वास गर्नुहोस् मलाई यसको सामर्थ्य छ तथा छु पनि अमानतदार ।[3]

قَالَ الَّذِيْ عِنْدَهٗ عِلْمٌ مِّنَ الْكِتٰبِ اَنَا اٰتِيْكَ بِهٖ قَبْلَ اَنْ يَّرْتَدَّ اِلَيْكَ

(४०) जोसँग किताबको ज्ञान थियो, त्यसले भन्यो तपाईं आँखा चिम्म गर्नुभन्दा पूर्व म त्यसलाई तपाईंको पासमा पुऱ्याउन सक्छु ।[4]

---

[1]यसबाट त्यो सभा तात्पर्य छ जो वाद-विवादका सुनुवाइका लागि आदरणीय सुलैमान प्रातः कालदेखि मध्यान्हसम्म आयोजित गर्दथे ।

[2]यसबाट ज्ञात भयो कि त्यो अवश्य एउटा जिन्न थियो, जसलाई अल्लाहले मनुष्यहरुभन्दा अप्रत्यासित शक्तिहरुले युक्त गरेको छ। किनभने कुनै मनुष्यका लागि चाहे त्यो जति नै शक्तिशाली किन नहोस्, यो सम्भव छैन कि बैतुल मुकद्दसबाट मारिब यमन (सबा) जाओस् तथा त्यसपछि त्यहाँबाट राजसिंहासन उठाएर ल्याओस् । तथा डेढ हजार मिलको यो दूरी जसलाई दुबैतिरको गणना गरिंदा तीन हजार मील पुग्दछ। तीन-चार घण्टामा तय गरोस् । एउटा ठूलो शक्तिशाली मनुष्य पनि प्रथम त यति ठूलो सिंहासनलाई उचाल्नै सक्दैन तथा यदि त्यसले अन्य मानिसहरुबाट अथवा वस्तुहरुको सहायताले उचालि पनि हाल्दछ भने यति अल्पकालिक अवधिमा यति यात्रा कुन प्रकार सम्भव छ कि पूरा गर्न सकोस् ।

[3]अर्थात् म त्यसलाई उचालेर ल्याउन पनि सक्छु तथा त्यसको कुनै कुरामा परिवर्तन पनि गर्ने छैन ।

[4]यो को व्यक्ति थियो जसले यो भन्यो ? यो किताब कुन चाहिं थियो ? तथा यो ज्ञान कुन चाहिं थियो जसको शक्तिले यो दावा गरियो ? यसमा व्याख्याकारहरुका विभिन्न कथन छन्। यी तीनै वटाको पूर्ण वास्तविकता त अल्लाह तआला नै जान्दछ। यहाँ कुरआन करीमका शब्दहरुबाट जो ज्ञात हुन्छ, त्यो यति नै हो कि त्यो मनुष्य नै थियो, जोसित अल्लाहको किताबको ज्ञान थियो, अल्लाह तआलाले चमत्कार एवं अप्राकृतिक रूपले त्यसलाई यो शक्ति प्रदान गऱ्यो कि आँखा चिम्म गर्दैमा त्यसले सिंहासन ल्यायो। आचरण तथा चमत्कार नाम नै हो यस्ता कार्यहरुको, जो उपस्थिति साधन तथा सामान्य कुराहरुबाट एकदम विपरीत होस्। तथा ती कुरा अल्लाह तआलाका सामर्थ्य एवं इच्छाले नै प्रकट हुन्छन्। यसकारण न व्यक्तिगत शक्ति आश्चर्यजनक छ तथा न त्यस ज्ञानको खोजको आवश्यकता छ, जसको वर्णन यहाँ छ ।

طَرْفُكَ ۚ فَلَمَّا رَآهُ مُسْتَقِرًّا عِنْدَهُ قَالَ هَٰذَا مِنْ فَضْلِ رَبِّي لِيَبْلُوَنِي أَأَشْكُرُ أَمْ أَكْفُرُ ۖ وَمَنْ شَكَرَ فَإِنَّمَا يَشْكُرُ لِنَفْسِهِ ۖ وَمَنْ كَفَرَ فَإِنَّ رَبِّي غَنِيٌّ كَرِيمٌ ﴿٤٠﴾

जब तपाईंले त्यसलाई आफ्नो निकट उपस्थित पाउनुभयो त भन्नुभयो कि यही मेरो प्रभुको उपकार हो, ताकि त्यसले मलाई जाँचोस् कि म कृतज्ञता व्यक्त गर्ने हूँ अथवा कृतघ्न । कृतज्ञता व्यक्त गर्ने व्यक्ति आफ्नो लाभकै लागि कृतज्ञता व्यक्त गर्दछ तथा जो अकृतज्ञता व्यक्त गर्दछ, त मेरो प्रभु निस्पृह तथा महान छ ।

قَالَ نَكِّرُوا لَهَا عَرْشَهَا نَنْظُرْ أَتَهْتَدِي أَمْ تَكُونُ مِنَ الَّذِينَ لَا يَهْتَدُونَ ﴿٤١﴾

(४१) आदेश दिए कि त्यसका सिंहासनमा केही परिवर्तन गरिदेउ,[१] हामी हेर्नेछौं कि यसले मार्ग पाउँछ अथवा ती मध्ये हुनेछ जो मार्ग पाउँदैन ।[२]

فَلَمَّا جَاءَتْ قِيلَ أَهَٰكَذَا عَرْشُكِ ۖ قَالَتْ كَأَنَّهُ هُوَ ۚ وَأُوتِينَا الْعِلْمَ

(४२) अनि जब आइहाल्यो त उसित सोधियो कि यस्तै तिम्रो सिंहासन छ ? उसले उत्तर भनी कि यो त जस्तो त्यही हो ।[३] हामीलाई

किनकि यो त्यस शक्तिको परिचय हो, जसद्वारा यो कर्म एकछिनमै भयो । अन्यथा वास्तवमा त यो अल्लाहको चाहना कै कारवाही थियो जसले क्षणमै जे चाहन्छ गर्न सक्दछ । आदरणीय सुलैमान पनि यस वास्तविकतासित परिचित थिए, यसकारण जब उनले देखे कि सिंहासन प्रस्तुत छ, त त्यसलाई आफ्नो प्रभुको कृपा नै भने ।

[१]अर्थात् त्यसका रङ्ग रूप अथवा आकारमा परिवर्तन गरिदेउ ।

[२]अर्थात् त्यो यस कुरासित परिचित हुन्छ कि यो सिंहासन उसैको हो अथवा उ त्यसलाई बुझ्न सक्दैनन् ? दोस्रो अर्थ यो हो कि त्यसले मार्गदर्शन पाउँछे अथवा पाउँदिन ? अर्थात् यति ठूलो चमत्कार देखेर पनि त्यसमा सत्यमार्ग खोल्दछ अथवा खोल्दैन ।

[३]परिवर्तनका कारण यसको आकारमा केही परिवर्तन आएको थियो, यसकारण त्यसले स्पष्ट शब्दहरुमा त्यसलाई आफ्नो हुने कुरो स्वीकार पनि गरिनन् तथा परिवर्तन उपरान्त मनुष्य तैपनि आफ्नो कुरोलाई चिन्दछ, यसकारण आफ्नो हुने कुरोलाई नकारेन पनि तथा यो पनि भने कि “जस्तो कि त्यही नै हो ।” यसमा स्वीकार छ न अस्वीकार । बरु अत्यन्त सतर्कतापूर्ण उत्तर छ ।

مِن قَبۡلِهَا وَكُنَّا مُسۡلِمِينَ ۝٤٢

यसभन्दा पूर्व नै ज्ञान दिइएको थियो तथा हामी मुसलमान थियौं ।[1]

وَصَدَّهَا مَا كَانَت تَّعۡبُدُ مِن دُونِ ٱللَّهِۖ إِنَّهَا كَانَتۡ مِن قَوۡمٖ كَٰفِرِينَ ۝٤٣

(४३) तथा त्यसबारे उनले रोकिदिएका थिए जसको त्यसले अल्लाहका अरितरिक्त पूजा गर्दै आएकी थिइन् । नि:सन्देह त्यो काफिरहरु मध्येकी थिई ।[2]

قِيلَ لَهَا ٱدۡخُلِي ٱلصَّرۡحَۖ فَلَمَّا رَأَتۡهُ حَسِبَتۡهُ لُجَّةٗ وَكَشَفَتۡ عَن سَاقَيۡهَاۚ قَالَ إِنَّهُۥ صَرۡحٞ مُّمَرَّدٞ مِّن قَوَارِيرَۗ قَالَتۡ رَبِّ إِنِّي

(४४) उसित भनियो कि महलमा प्रवेश गर अनि जब त्यसले देखी त त्यसलाई जलाशय ठान्यो । (अनि त्यसले आफ्नो लुगामाथि उचाली) यसरी आफ्नो दुईटा खुट्टा खोलिदिई[3] उनले भने, "यो त शीशाबाट निर्मित महल हो ।" भनी "हे मेरो प्रभु ! निश्चय नै मैले आफ्नो प्राणमाथि अत्याचार गरें ।

[1]अर्थात् यहाँ आउनुभन्दा पूर्व नै हामीले जानिसकेका थियौं कि तपाईं अल्लाहका नबी हुनुहुन्छ तथा तपाईंका अधीन एवं अनुयायी भइहालेका थियौं । परन्तु इमाम इब्ने कसीर तथा शौकानी आदिले यसलाई आदरणीय सुलैमानका कथन भनेका छन् कि हामीलाई अघि नै दिइहालिएको थियो कि महारानी सबा आज्ञाकारणी भई सेवामा उपस्थित हुनेछिन् ।

[2]यो अल्लाह तआलाको कथन हो तथा صَدَّهَا को कर्ता مَا كانت تعبد हो । अर्थात् त्यसलाई अल्लाहको इबादतबाट जुन कुरोले रोकिदिएको थियो, त्यो अल्लाहका अतिरिक्त अन्यको पूजा थियो, तथा यसको कारण यो थियो कि त्यसको सम्बन्ध एउटा काफिर समुदायसित थियो, यसकारण एकेश्वरको वास्तविकताबाट अन्जाम रहेकी थिई, केही ज्ञाताहरुले صَدَّهَا को कर्ता अल्लाहलाई तथा केहीले सुलैमानलाई भनेका छन् । अर्थात् अल्लाह अथवा अल्लाहका आदेशले सुलेमानले त्यसलाई अल्लाहका अतिरिक्त अन्यको पूजाबाट रोकिदिए । परन्तु प्रथम कथन अधिक उचित छ । (फ़तहुल क़दीर)

[3]यो महल शीशाबाट निर्मित थियो जसको आँगन तथा फर्श पनि शीशाको थियो ।لُجَّةٌ गहिरो पानी अथवा जलाशयलाई भन्दछन् । आदरणीय सुलेमानले आफ्नो नबूअतका लागि सम्मानसूचक चमत्कार देखाउनुका पश्चात उचित ठाने कि त्यसलाई आफ्नो सांसारिक वैभव एवं शोभाको एक झलक देखाइयोस्, जसमा अल्लाहले मानव इतिहासमा उनलाई विशेषता दिएको थियो । अत: त्यसलाई महलमा प्रवेश गर्नुको आदेश दिइयो, जब त्यो प्रवेश गर्नथाली, त त्यसले आफ्नो स्कर्ट माथि उचाली । शीशाको फर्श त्यसलाई पानी प्रतीत भयो, जसबाट आफ्ना वस्त्रहरुलाई बचाउनका लागि त्यसले आफ्ना सुरुवाल माथि उचाली ।

ظَلَمْتُ نَفْسِي وَأَسْلَمْتُ مَعَ سُلَيْمَٰنَ لِلَّهِ رَبِّ ٱلْعَٰلَمِينَ ۝

अब म सुलेमानका साथ अल्लाह सर्वलोकका नाथको आज्ञाकारणी बन्दछु ।[1]

وَلَقَدْ أَرْسَلْنَآ إِلَىٰ ثَمُودَ أَخَاهُمْ صَٰلِحًا أَنِ ٱعْبُدُوا۟ ٱللَّهَ فَإِذَا هُمْ فَرِيقَانِ يَخْتَصِمُونَ ۝

(४५) तथा निःसन्देह हामीले 'समूद' तिर उनका भाई 'स्वालेह' लाई पठायौं कि तिमी सबै अल्लाहको इबादत (उपासना) गर, तैपनि उनीहरु दुई गुट बनी आपसमा लड्न थाले ।[2]

قَالَ يَٰقَوْمِ لِمَ تَسْتَعْجِلُونَ بِٱلسَّيِّئَةِ قَبْلَ ٱلْحَسَنَةِ ۖ لَوْلَا تَسْتَغْفِرُونَ ٱللَّهَ لَعَلَّكُمْ تُرْحَمُونَ ۝

(४६) (उहाँले) भने हे मेरा समुदायका मानिसहरु ! तिमी भलाईभन्दा पहिले नराम्रो कुराको शीघ्रता किन गरिराखेका छौ ?[3] तिमी अल्लाह (तआला) सित क्षमा किन माँग्दैनौं ? ताकि तिमीमाथि दया गरियोस् ।



[1]अर्थात् जब त्यसले फर्शको वास्तविकता बुझिहाली त आफ्नो त्रुटिको पनि संवेदन भयो तथा आफ्नो अपराध स्वीकार गर्दै मुसलमान हुनुको घोषणा गरिदिइ । सफ़ा, चिल्लो कुँदिएका पत्थरहरुलाई مُمَرَّد भनिन्छ । यसैबाट أمرد छ जो त्यस सुन्दर बालकलाई भनिन्छ, जसको अनुहारमा अहिले दाह्री, जुङ्गा नहोस् । जुन वृक्षमा पातहरु हुँदैन त्यसलाई مَرْدَاء भनिन्छ । (फ़तहुल क़दीर) परन्तु यहाँ यो निर्माण अथवा जडानको अर्थमा छ । अर्थात शीशाबाट निर्मित अर्थात जडेको महल ।

नोटः महारानी सबा (बिलकीस) मुसलमान हुनुका पश्चात के भयो ? कुर्आनमा अथवा कुनै सहीह हदीसमा यसको विस्तृत जानकारी पाइँदैन । व्याख्यात्मक कथनहरुमा अवश्य पाइन्छ कि उनको आपसमा विवाह भएको थियो, परन्तु जब कुर्आन तथा हदीस यस विषयमा मौन छन् त यस सन्दर्भमा मौन हुनु नै उत्तम छ ।

[2]यसबाट तात्पर्य काफ़िर तथा ईमान भएका हुन्, झगड्नुको अर्थ प्रत्येक सम्प्रदायको यो दावा हो कि त्यो सत्यमा छ ।

[3]अर्थात् ईमान स्वीकार गर्नुका साटो तिमी कुफ्रमाथि किन हट गरिराखेका छौ, जुन यातनाको कारण छ । यसका अतिरिक्त आफ्ना विरोध एवं अवहेलनाका कारण भन्थे पनि कि हामीमाथि प्रकोप ल्याउ, जसका उत्तरमा आदरणीय स्वालेहले यो भने ।

قَالُوا اطَّيَّرْنَا بِكَ وَبِمَن مَّعَكَ ۚ قَالَ طَائِرُكُمْ عِندَ اللَّهِ ۖ بَلْ أَنتُمْ قَوْمٌ تُفْتَنُونَ ﴿٤٧﴾

(४७) (उनीहरु) भन्नथाले कि हामी त तिमी तथा तिम्रा साथीहरुबाट अपशगुन लिइराखेका छौं,[1] (उहाँले) उत्तर दिनुभयो कि तिम्रो अपशगुन अल्लाहको पासमा छ,[2] बरु तिमी त परीक्षामा परेका मानिसहरु हौ ।[3]

وَكَانَ فِي الْمَدِينَةِ تِسْعَةُ رَهْطٍ يُفْسِدُونَ فِي الْأَرْضِ وَلَا يُصْلِحُونَ ﴿٤٨﴾

(४८) यस नगरमा नौ (मुखिया) व्यक्ति थिए जो धर्तीमा उपद्रव फैलाइराखेका थिए तथा सुधार गर्दैनथे ।

قَالُوا تَقَاسَمُوا بِاللَّهِ لَنُبَيِّتَنَّهُ وَأَهْلَهُ ثُمَّ لَنَقُولَنَّ لِوَلِيِّهِ مَا شَهِدْنَا مَهْلِكَ أَهْلِهِ وَإِنَّا لَصَادِقُونَ ﴿٤٩﴾

(४९) उनीहरुले आपसमा अल्लाहको सौगन्ध खाएर प्रतिज्ञा गरे कि राति नै 'स्वालेह' तथा त्यसका परिवारका मानिसहरुमाथि हामीले छापा मार्नेछौं ।[4] तथा त्यसका उत्तराधिकारीहरुसित भनिदिनेछौं कि हामी त्यसका परिवारको हत्याको

[1] اطَّيَّرْنَا वास्तवमा تطيّرنا छ । यसको धातू طَير (उड्नु) हो । अरब जब कुनै कार्यको अथवा यात्राको विचार गर्दथे तं पंक्षी उडाउँदथे, यदि त्यो दायाँतिर उड्थ्यो भने त्यसलाई शुभ ठान्दथे तथा त्यो कार्य गरिहाल्थे अथवा यात्राका लागि निस्किहाल्थे तथा यदि बायाँतिर उड्थ्यो भने त्यसलाई अपशगुन ठान्थे तथा त्यस कार्य अथवा यात्राबाट रोकिन्थे । (फ़तहुल क़दीर) इस्लाममा यो शुभ-अशुभ निषेध छ परन्तु तफ़ाउल उचित छ । अर्थात राम्रा शब्द अथवा नाम सुनेर शुभ ठान्नु ।

[2]अर्थात् ईमान भएकाहरु अपशगुनका कारण होइनन्, जस्तो कि तिमी ठानिराखेका छौ बरु यसको मूल कारण अल्लाहकै पासमा छ किनकि अशुभ (अकाल आदि) पुगेको छ, त्यो अल्लाहतिरबाट हो तथा त्यसको कारण तिम्रो कुफ्र हो । (फ़तुहल क़दीर)

[3]अर्थात् विचलनमा छुट दिएर तिम्रो परीक्षा लिईदैछ ।

[4]अर्थात् स्वालेहको तथा त्यसका परिवारका सदस्यहरुका हत्या गरिदिनेछौं, यो सौगन्ध त्यस समय खाए, जब ऊँटनीको हत्या गरेपश्चात आदरणीय स्वालेहले भने कि तीन दिन पश्चात तिमीमाथि प्रकोप आउनेछ । उनीहरुले भने कि ती प्रकोपभन्दा पूर्व नै हामीले स्वालेह तथा त्यसका परिवारका मानिसहरुका हत्या गरिदिनेछौं ।

समय उपस्थित थिएनौं[1] तथा हामी साँचो बोलिराखेका छौं

وَمَكَرُوا مَكْرًا وَمَكَرْنَا مَكْرًا وَهُمْ لَا يَشْعُرُونَ ﴿٥٠﴾

(५०) तथा उनीहरुले चाल चाले[2] तथा हामीले पनि[3] तथा उनीहरु त्यसलाई बुझ्दैनथे[4]

فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ مَكْرِهِمْ أَنَّا دَمَّرْنَاهُمْ وَقَوْمَهُمْ أَجْمَعِينَ ﴿٥١﴾

(५१) अब हेरिहाल कि उनको षड्यन्त्रको परिणाम के भयो ? हामीले उनीहरुलाई तथा उनका समुदायलाई सबैलाई ध्वस्त गरिदियौं ।[5]

فَتِلْكَ بُيُوتُهُمْ خَاوِيَةً بِمَا ظَلَمُوا إِنَّ فِي ذَٰلِكَ لَآيَةً لِّقَوْمٍ يَعْلَمُونَ ﴿٥٢﴾

(५२) यी हुन् उनका घर जो उनका अत्याचारका कारण उजडिएका छन्, जो ज्ञान राख्दछन्, उनका लागि त्यसमा ठूलो निशानी लक्षण छ ।

وَأَنجَيْنَا الَّذِينَ آمَنُوا وَكَانُوا يَتَّقُونَ ﴿٥٣﴾

(५३) तथा हामीले उनलाई जसले ईमान कायम गरेका थिए र सत्यकर्म गर्दथे, बचाइहाल्यो ।



[1]अर्थात् हत्याका समय हामी त्यहाँ उपस्थित थिएनौं तथा न हामीलाई जानकारी छ कि कसले उनको हत्या गरेको छ ।

[2]उनका षड्यन्त्र यही थियो कि उनीहरुले आपसमा सौगन्ध खाएका थिए कि रात्रिको अँध्यारोमा यस हत्याको योजनाका अनुसार कार्य गर्नेछौं तथा तीन दिन पूर्व नै हामीले स्वालेह तथा उसका परिवारलाई हत्या गरिहाल्नेछौं ।

[3]अर्थात् हामीले उनका यस षड्यन्त्रको बदला दियौं तथा उनलाई ध्वस्त गरिदियौं । यहाँ पनि مكرنا مكرًا बाट त्यसको रुपको अर्न्तगत वर्णन गरिएको छ ।

[4]अल्लाहको उपायलाई बुझ्दैनथे ।

[5]अर्थात् हामीले उपरोक्त नौ सरदारहरुलाई मात्र होइन, बरु उनका सम्पूर्ण समुदायलाई ध्वस्त गरिदियौं । किनकि त्यो समुदाय विनाशको मूल कारण कुफ्र तथा अत्याचारमा पूर्ण रुपमा उनका साथमा थियो, यद्यपि क्रियात्मक रूपले उनका हत्याको योजनामा सम्मिलित हुन सकेको थिएन किनभने यो योजना गुप्त थियो परन्तु उनको हार्दिक इच्छाको अनुरुप थियो, जो नौं जनाले आदरणीय स्वालेह तथा उनका परिवारका मानिसहरुका विरुद्ध योजना तयार गरेका थिए । यसकारण सम्पूर्ण समुदाय नै विनाश योग्य पाइयो ।

وَلُوطًا إِذْ قَالَ لِقَوْمِهِۦٓ أَتَأْتُونَ ٱلْفَٰحِشَةَ وَأَنتُمْ تُبْصِرُونَ ﴿٥٤﴾

(५४) तथा लूतको (चर्चा गर),[1] जबकि उसले आफ्ना समुदायसित भन्यो कि तिमीले आँखाले हेरे उपरान्त पनि तिमी कुकर्म गरिराखेका छौ ?[2]

أَئِنَّكُمْ لَتَأْتُونَ ٱلرِّجَالَ شَهْوَةً مِّن دُونِ ٱلنِّسَآءِ ۚ بَلْ أَنتُمْ قَوْمٌ تَجْهَلُونَ ﴿٥٥﴾

(५५) यो के कुरो हो ? कि तिमी स्त्रीहरुलाई छाडि पुरुषहरुको पासमा कामवासनाले आउँछौ ?[3] सत्य यो हो कि तिमी अत्यन्त मूर्खता गरिराखेका छौ ।[4]

۞ فَمَا كَانَ جَوَابَ قَوْمِهِۦٓ إِلَّآ أَن قَالُوٓا۟ أَخْرِجُوٓا۟ ءَالَ لُوطٍ مِّن قَرْيَتِكُمْ ۖ إِنَّهُمْ أُنَاسٌ يَتَطَهَّرُونَ ﴿٥٦﴾

(५६) उनको समुदायको उत्तर यो भन्नुका उपरान्त अन्य केही थिएन कि लूतको परिवारका मानिसहरुलाई आफ्नो नगरबाट निकालिदियो, यिनीहरु त बडो पवित्रता देखाइराखेका छन् ।[5]

فَأَنجَيْنَٰهُ وَأَهْلَهُۥٓ إِلَّا ٱمْرَأَتَهُۥ

(५७) अत: हामीले उसलाई तथा उसको परिवारलाई, उसकी पत्नी बाहेक, सबैलाई बचाइहाल्यौं ।

[1]अर्थात् लूतको घटना याद गर जब लूतले भने । यो समुदाय अमूरिया तथा सदूमका वस्तीहरुमा निवास गर्दथ्यो ।

[2]अर्थात् यो जान्नुका उपरान्त कि यो निर्लज्जताको कर्म हो । यहाँ हेर्नुको अर्थ हृदयका आँखाले हेर्नु हो, तथा यदि उपरी आँखाले हेर्न तात्पर्य हो भने अर्थ यो हुन्छ कि सबैका अगाडी यो कुकर्म गर्दछौ ? अर्थात तिम्रो दुष्टता यति बढिसकेको छ कि लुक्नुको पनि प्रयत्न गर्दैनौ ।

[3]यो पुनरावृत्ति अपारको लागि छ कि यो निर्लज्जता त्यही, समलैंगिकता हो, जुन स्त्रीहरुलाई छाडि पुरुषहरुका साथ अप्राकृतिक कामवासनाका रुपमा गर्दछौ ।

[4]अथवा त्यसका निषेधाज्ञा (हुरमत) बाट अथवा यस कुकर्मको दण्डसित तिमी अन्जान छौ अन्यथा शायद यो कुकर्म गर्दैनथ्यौ ।

[5]यो कटाक्ष तथा उपहासको रुपमा छ ।

قَدَّرْنٰهَا مِنَ الْغٰبِرِيْنَ ۝٥٧

यसको अनुमान त शेष रहनेहरुमा हामीले लगाइसकेका थियौं ।[1]

وَاَمْطَرْنَا عَلَيْهِمْ مَّطَرًا ۚ فَسَآءَ مَطَرُ الْمُنْذَرِيْنَ ۝٥٨

(५८) तथा उनीमाथि एक (विशेष प्रकार को) वर्षा गरिदियौं,[2] अतः ती तर्साइएका मानिसहरुमाथि नराम्रो वर्षा भयो ।[3]

قُلِ الْحَمْدُ لِلّٰهِ وَسَلٰمٌ عَلٰى عِبَادِهِ الَّذِيْنَ اصْطَفٰى ؕ آٰللّٰهُ خَيْرٌ اَمَّا يُشْرِكُوْنَ ۝٥٩

(५९) त तपाईं भनिदिनुस् कि सम्पूर्ण प्रशंसा अल्लाहकै लागि छ तथा त्यसका स्वच्छन्द भक्तहरुमाथि सलाम छ ।[4] के अल्लाह (तआला) श्रेष्ठ छ अथवा ती जसलाई यिनीहरु साझेदार बनाइराखेका छन् ।[5]

[1]अर्थात् अघि नै त्यसको विषयमा यो अनुमान अर्थात् अल्लाहद्वारा लेखिएको भाग्यमा थियो कि त्यो ती नै पछि रहने मध्यकी हुनेछ, जसमाथि प्रकोप आउनेछ ।

[2]उनीमाथि जुन प्रकोप आयो, त्यसको विवरण पहिला गुज्रिसकेको छ कि ती वस्तीहरुलाई उनीमाथि पल्टाइयो तथा त्यस पश्चात उनीमाथि पत्रमाथि पत्र रोडा-ढुङ्गाहरुको वर्षा भयो ।

[3]अर्थात् जसलाई पैग़म्बरहरुद्वारा तर्साइयो तथा उनीमाथि प्रमाण स्थापित गरियो परन्तु उनीहरु झुठ्लाउन तथा इन्कार गर्नबाट रोकिएनन् ।

[4]जसलाई अल्लाहले रिसालत तथा भक्तहरुका मार्गदर्शनका लागि चयन गऱ्यो, ताकि मानिसहरु केवल एक अल्लाहको पूजा गरुन् ।

[5]यी प्रश्नहरु नकारात्मक हुन् । अर्थात् अल्लाहकै इबादत सर्वोत्तम छ किनभने जब स्रष्टा, पालक एवं स्वामी त्यही हो, त इबादतका योग्य कोही अन्य किन हुन सक्दछ जो न कुनै वस्तुको स्रष्टा हो, न पालक तथा स्वामी हो خير सर्वोत्तमको अर्थमा प्रयोग हुन्छ, परन्तु यहाँ यस अर्थमा होइन मात्र उत्तमको अर्थमा छ किनभने मिथ्या पूज्यमा त कुनै राम्रो कुरा त छँदैछैन ।

أَمَّنْ خَلَقَ السَّمَٰوَٰتِ وَالْأَرْضَ وَأَنزَلَ لَكُم مِّنَ السَّمَآءِ مَآءً فَأَنۢبَتْنَا بِهِۦ حَدَآئِقَ ذَاتَ بَهْجَةٍ مَّا كَانَ لَكُمْ أَن تُنۢبِتُوا۟ شَجَرَهَآ ۗ أَءِلَٰهٌ مَّعَ ٱللَّهِ ۚ بَلْ هُمْ قَوْمٌ يَعْدِلُونَ ﴿٦٠﴾

(६०) (तसर्थ भन त) आकाशहरु तथा धर्तीलाई कसले पैदा गऱ्यो ? कसले आकाशबाट वर्षा गऱ्यो, अनि त्यसबाट हराभरा भव्य बगैंचाहरु उमारे ? यी बगैंचाहरुका वृक्षलाई तिमी कदापि उमार्न सक्दैनौं,[1] के अल्लाहका अतिरिक्त अन्य कोही पूजनीय पनि छ ?[2] बरु यिनीहरु छाडिदिन्छन् (सोझो मार्ग) ।[3]

أَمَّن جَعَلَ ٱلْأَرْضَ قَرَارًا وَجَعَلَ

(६१) के त्यो जसले धर्तीलाई निवासस्थली बनायो,[4] त्यसका बीच नदीहरु प्रवाहित गरिदिए,

[1]यहाँबाट पछिल्ला वाक्यका व्याख्या तथा त्यसको तर्क प्रस्तुत गरिदैछ कि उहाँ नै अल्लाह पैदा गर्ने, जीविका प्रदान गर्नु तथा व्यवस्था गर्नुमा एक्लो हुनुहुन्छ । उहाँको कोही साझी छैन । सोध्यो, आकाशहरुलाई यति उचाईमा तथा यति सुन्दर बनाउनेवाला, त्यसमा आकर्षक तारामण्डल, प्रकाश भएका तारा एवं चल्ने ग्रह बनाउनेवाला, त्यसैप्रकार धर्ती तथा त्यसमा पर्वत, नदीहरु, स्रोत समुद्र, झरना, खेतीहरु तथा विभिन्न प्रकारका पशुपंक्षी आदि सृष्टि गर्ने तथा आकाशबाट वर्षा गरी त्यसद्वारा सुन्दर बगैंचा उमार्ने को हो ? के तिमीमध्ये कोही यस्तो छ जो धर्तीबाट वृक्ष नै उमारेर देखाओस् ? यी सबैको उत्तरमा मूर्तिपूजक भन्थे तथा स्वीकार गर्दथे कि सबै कुरा गर्ने अल्लाह तआला हो, जस्तो कि क़ुरआनमा अन्य स्थानमा छ । उदाहरणार्थ, (सूर: अल-अनकबूत-६३)

[2]अर्थात् यी सबै वास्तविकताहरुका उपरान्त के अल्लाहबाहेक कोही अन्य पनि अस्तित्व यस्तो छ जो पूजाको योग्य छ ? अथवा जसले यिनीहरुमध्ये कुनै वस्तुको रचना गरेको छ ? अर्थात् कोही यस्तो छैन जसले केही बनाएको छ अथवा पूजाको योग्य हो । أَمَّن को यी आयतहरुमा भावार्थ यो हो कि के त्यो अल्लाह जो यी सबै वस्तुहरुको स्रष्टा हुनुहुन्छ, त्यस व्यक्ति सरह छ जो यिनीहरुमध्ये कुनै वस्तुलाई उत्पन्न गर्ने सामर्थ्य राख्दैन ? (इब्ने कसीर)

[3]यसको अर्को अनुवाद हो कि उनीहरु त्यसका समान तथा समतुल्य मान्दछन् ।

[4]अर्थात् स्थिर तथा अचल, न हल्लन्छ न डुल्छ । यदि यस्तो भएको भए धर्तीमा बस्नु नै असम्भव हुनजान्थ्यो । धर्तीमा ठूला-ठूला पर्वत बनाउनुको उद्देश्य पनि धर्तीलाई हल्लिनु-डुल्नुबाट रोक्नु नै हो ।

خِلٰلَهَآ اَنْهٰرًا وَّجَعَلَ لَهَا رَوَاسِيَ وَجَعَلَ بَيْنَ الْبَحْرَيْنِ حَاجِزًا ۗ ءَاِلٰهٌ مَّعَ اللّٰهِ ۚ بَلْ اَكْثَرُهُمْ لَا يَعْلَمُوْنَ ۝٦١

त्यसका लागि पर्वत बनायो एवं दुई समुद्रहरुका मध्ये रोक बनाइदियो,[1] के अल्लाहका साथ कोही अन्य पूजनीय पनि छ ? बरु तिनीहरुमध्ये अधिकतर केही जान्दै-जान्दैनन् ।

اَمَّنْ يُّجِيْبُ الْمُضْطَرَّ اِذَا دَعَاهُ وَيَكْشِفُ السُّوْٓءَ وَيَجْعَلُكُمْ خُلَفَآءَ الْاَرْضِ ۗ ءَاِلٰهٌ مَّعَ اللّٰهِ ۗ قَلِيْلًا مَّا تَذَكَّرُوْنَ ۝٦٢

(६२) असहायको पुकारलाई जबकि त्यो पुकार्दछ, कसले स्वीकार गरी संकटलाई हटाइदिन्छ[2] तथा तिमीलाई धर्तीको उत्तराधिकारी बनाउँछ ?[3] के अल्लाह (तआला) का साथ अन्य कोही पूज्य छ ? तिमी बहुत कम शिक्षा ग्रहण गर्दछौ ।

اَمَّنْ يَّهْدِيْكُمْ فِيْ ظُلُمٰتِ الْبَرِّ وَالْبَحْرِ وَمَنْ يُّرْسِلُ الرِّيٰحَ بُشْرًاۢ بَيْنَ يَدَيْ

(६३) को हो त्यो जो तिमीलाई स्थल तथा जलका अन्धकारहरुमा मार्ग देखाउँछ[4] तथा जो आफ्नो कृपाले पहिला नै शुभ-सूचना दिने वायु चलाउँछ ?[5] के अल्लाहका साथ कोही

[1]यसको व्याख्याका लागि हेर्नुस् सूर: अल-फुरक़ान-५३ को व्याख्या

[2]अर्थात् त्यही अल्लाह हो जसलाई संकटको समय पुकारिन्छ तथा दुखहरुका समय जसबाट आशाहरु बाँधिएका हुन्छन् । مُضْطَر (असहाय) त्यसतिर आकर्षित हुन्छ तथा अनिष्टलाई त्यही हटाउँछ । तथा हेर्नुस् सूर: अल-इस्रा-६७ तथा सूर: अल-नमल-५३

[3]अर्थात् एक सम्प्रदायका पश्चात अर्को सम्प्रदाय, एक समुदायका पश्चात अर्को समुदाय तथा एक जातिका पश्चात अर्को जाति पैदा गर्दछ । अन्यथा यदि त्यसले सबैलाई एउटै समयमा पैदा गर्थ्यो भने धर्ती पनि तंगी (संकुचन) को सिकायत गर्थ्यो, व्यवसायमा पनि कठिनाई हुन्थ्यो तथा यी सबै एक-अर्काका खुट्टा तान्नमा नै व्यस्त रहन्थे । अर्थात् एकका पश्चात अर्का मनुष्यहरुलाई पैदा गर्नु तथा एकलाई अर्काका उत्तराधिकारी बनाउनु, यो पनि उसको ती कृपा हो ।

[4]अर्थात् आकाशहरुमा तारालाई प्रकाश प्रदान गर्ने को हो जसबाट तिमी अन्धकारमा मार्ग पाउँछौ ? पर्वत तथा बेसीहरुलाई सृष्टि गर्ने को हो जो एक-अर्काका लागि सीमाहरुको पनि कार्य गर्दछन् तथा मार्गहरुका संकेत पनि ।

[5]अर्थात् वर्षाभन्दा पूर्व चिसो वायुहरु जो वर्षाको सूचक मात्र नै हुँदैन बरु उनीबाट सुख्खाबाट ग्रसित मानिसहरुमा खुशीको लहर पनि सञ्चालित हुन्छ ।

رَحْمَتِهٖ ؕ ءَاِلٰهٌ مَّعَ اللّٰهِ ؕ تَعٰلَى اللّٰهُ عَمَّا يُشْرِكُوْنَ ﴿٦٣﴾

अन्य देवता पनि छ ? जसलाई यिनी साभ्की बनाउँछन्, ती सबैभन्दा अल्लाह (तआ़ला) श्रेष्ठ छ ।

اَمَّنْ يَّبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيْدُهٗ وَمَنْ يَّرْزُقُكُمْ مِّنَ السَّمَآءِ وَالْاَرْضِ ؕ ءَاِلٰهٌ مَّعَ اللّٰهِ ؕ قُلْ هَاتُوْا بُرْهَانَكُمْ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٦٤﴾

(६४) को हो जो सृष्टिको प्रथम पटक रचना गर्दछ अनि त्यसलाई फर्काउनेछ[1] तथा जो तिमीलाई आकाश तथा धर्तीबाट जीविका प्रदान गरिराखेको छ,[2] के अल्लाहका साथ अन्य कोही देवता पनि छ ? भनिदिनुस् कि यदि तिमी साँचो हौ भने आफ्ना प्रमाण ल्याउ ।

قُلْ لَّا يَعْلَمُ مَنْ فِى السَّمٰوٰتِ وَالْاَرْضِ الْغَيْبَ اِلَّا اللّٰهُ ؕ

(६५) भनिदिनुस् कि आकाशमा भएकामध्ये एवं धर्तीमा भएकामध्ये अल्लाहका अतिरिक्त कोही पनि परोक्ष (का कुराहरु) जान्दैन ।[3] उनीहरुलाई त

[1]अर्थात् केयामतका दिन तिमीलाई पुनः जीवन प्रदान गर्नेछ ।

[2]अर्थात् आकाशबाट वर्षा झरालेर धर्तीबाट त्यसका लुकेका कोष (अनाज तथा फलहरु) पैदा गर्दछ तथा यसप्रकार आकाश तथा धर्तीका विभूतिहरुका द्वार खोलिदिन्छ ।

[3]अर्थात् जुनप्रकार विषयहरुमा अल्लाह तआ़ला एक्लो (अद्वितीय) छ, त्यसको कोही साभ्केदार छैन त्यसैप्रकार परोक्षका ज्ञानमा पनि त्यो एक्लो छ । त्यसका अतिरिक्त कसैलाई पनि परोक्षको ज्ञान छैन । नबी तथा रसूलहरुलाई पनि त्यति नै ज्ञान हुन्छ जति अल्लाह तआ़ला प्रकाशना तथा ईश्वरीय प्रेरणाद्वारा उनलाई बताउँछ तथा जो ज्ञान कसैको भनाईबाट प्राप्त हुन्छ, त्यसको ज्ञातालाई परोक्षज्ञ भनिँदैन । परोक्षज्ञ त त्यो हो जो बिना कुनै माध्यम स्वयं प्रत्येक वस्तुको ज्ञान राख्दछ, प्रत्येक वास्तविकतासित परिचित हुन्छ, तथा गुप्त भन्दा गुप्त कुरो पनि त्यसको ज्ञानको परिधिभन्दा बाहिर हुँदैन । यो विशेषता केवल तथा मात्र अल्लाहकै हो, यसकारण केवल त्यही गुप्त कुरा (परोक्ष) को ज्ञाता छ । त्यसका अतिरिक्त पूरा जगतमा कोही पनि गुप्त कुरा (परोक्ष) को ज्ञाता छैन । आदरणीय आयशा (رضى الله عنها) भन्नुहुन्छ कि जो व्यक्ति यो विचार राख्दछ कि नबी सल्लल्लाहु अलैहि वसल्लम भविष्यमा घटित हुने घटनाहरुका ज्ञान राख्नुहुन्छ, त्यसले अल्लाहमाथि बहुत ठूलो आक्षेप लगायो, यसकारण कि त्यो भनिराखेको छ कि "आकाश तथा धर्तीमा परोक्ष (गुप्त कुरा) को ज्ञान केवल अल्लाहलाई छ ।" (सहीह बुख़ारी संख्या ४८५५, सहीह मुस्लिम संख्या २८७, तथा अल-तिर्मिजी संख्या ३०६८) आदरणीय क़तादः भन्नुहुन्छ कि अल्लाह तआ़लाले ताराहरुलाई तीन उद्देश्यले उत्पन्न गऱ्यो : आकाशको शोभा, मार्ग बताउनुका साधन तथा शैतानहरुलाई हान्नका निम्ति । परन्तु अल्लाहका आदेशहरुबाट

وَمَا يَشْعُرُونَ أَيَّانَ يُبْعَثُونَ ﴿٦٥﴾

यो पनि ज्ञात छैन कि उनी कहिल्यै पुनर्जीवित गरिनेछन् ।

بَلِ ادَّارَكَ عِلْمُهُمْ فِي الْآخِرَةِ ۚ بَلْ هُمْ فِي شَكٍّ مِّنْهَا ۖ بَلْ هُم مِّنْهَا عَمُونَ ﴿٦٦﴾

(६६) बरु आखिरतका विषयमा उनको ज्ञान समाप्त भइसकेको छ।[1] बरु यिनीहरु उसतिरबाट संदेहमा छन् । बरु यिनी त्यसबाट अन्धा छन् ।[2]

وَقَالَ الَّذِينَ كَفَرُوا أَإِذَا كُنَّا تُرَابًا وَآبَاؤُنَا أَئِنَّا لَمُخْرَجُونَ ﴿٦٧﴾

(६७) काफ़िरहरुले भने कि के जब हामी माटो भइहाल्नेछौं तथा हाम्रा पूर्वज पनि, के हामी पुन: निकालिनेछौं ।

---

अनभिज्ञ मानिसहरुले उनीबाट गुप्त कुरा (परोक्ष) को ज्ञान प्राप्त गर्ने (ज्योतिषि) को ढोङ रचेका छन् । जस्तो भन्दछन्, जो अमुक-अमुक ग्रहका समय विवाह गर्नेछन् त यो हुनेछ, अमुक-अमुक ग्रहका समय यात्रा गर्नेछन् भने यस्तो-यस्तो हुनेछ, अमूक-अमूक ग्रहमा जन्म लिन्छ भने यस्तो यस्तो हुनेछ इत्यादि-इत्यादि, यो सबै ढोङ (आडम्बर) हुन् । उनका अनुमानका विरुद्ध अधिकतर भइरहन्छ । ग्रहहरु, पंक्षी तथा पशुहरुबाट गुप्त कुरा (परोक्ष) को ज्ञान कुन प्रकार प्राप्त हुनसक्दछ जबकि अल्लाहको निर्णय त यो हो कि आकाशहरु तथा धर्तीमा अल्लाहका अतिरिक्त कोही गुप्त कुरालाई जान्दैन ? (इब्ने कसीर)

[1]अर्थात् उनका ज्ञान आखिरत घटित हुने समय जान्नमा असमर्थ छ । अथवा उनको ज्ञान आखिरतको विषयमा समान छ, जस्तै नबी सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय जिब्रीलबाट सोधे पश्चात भन्नुभएको थियो, "केयामतको विषयमा म प्रश्न गर्नेवाला (नबी अकरम सल्लल्लाहु अलैहि वसल्लम) पनि प्रश्नकर्ता (आदरणीय जिब्रील) भन्दा अधिक ज्ञान राख्दिन ।" (हदीसको संग्रह मुस्लिम) अथवा यो अर्थ हो कि उनको ज्ञान पूर्ण भइहाल्यो, यसकारण कि उनले केयामतका विषयमा गरिएका वचनहरुलाई आफ्ना आँखाले देखिहाल्यो, अर्थात् यो ज्ञान अब उनका लागि लाभदायक छैन, किनकि संसारमा उनीहरु यसलाई झुठ्लाइरहन्थे । जस्तो आदेश भयो :

﴿أَسْمِعْ بِهِمْ وَأَبْصِرْ يَوْمَ يَأْتُونَنَا ۖ لَٰكِنِ الظَّالِمُونَ الْيَوْمَ فِي ضَلَالٍ مُّبِينٍ﴾

"कति राम्ररी देख्ने, सुन्नेहरु हुनेछन् त्यस दिन जबकि हाम्रा समक्ष उपस्थित हुनेछन् । किन्तु आज त यी अत्याचारीहरु स्पष्ट विचलनमा परेका छन् ।" (सूर: मरियम-३८)

[2]अर्थात् संसारमा आखिरतको विषयमा संदेहमा छन् बरु अन्धा छन् कि भ्रष्ट बुद्धि तथा भ्रष्ट ज्ञानका कारण आखिरतमा विश्वासबाट बञ्चित छन् ।

لَقَدْ وُعِدْنَا هَٰذَا نَحْنُ وَآبَاؤُنَا مِن قَبْلُ إِنْ هَٰذَا إِلَّا أَسَاطِيرُ الْأَوَّلِينَ ﴿٦٨﴾

(६८) हामी तथा हाम्रा पूर्वजहरुलाई धेरै पहिलादेखि यी वचन दिईदै आइराखिएका छन्। केही होइन, यी त मात्र पूर्वजहरुका काल्पनिक कथाहरु हुन्।[1]

قُلْ سِيرُوا فِي الْأَرْضِ فَانظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الْمُجْرِمِينَ ﴿٦٩﴾

(६९) भनिदिनुस् कि धर्तीमा अलि हिंड्डुल गरी हेर त कि पापीहरुको कस्तो परिणाम भयो ?[2]

وَلَا تَحْزَنْ عَلَيْهِمْ وَلَا تَكُن فِي ضَيْقٍ مِّمَّا يَمْكُرُونَ ﴿٧٠﴾

(७०) तथा तपाईं उनीहरुका विषयमा चिन्तित नहुनुस् तथा उनका षड्यन्त्रहरुबाट संकुचित हृदय नहुनुस्।

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٧١﴾

(७१) तथा भन्दछन् कि यो वचन कहिले छ यदि साँचो हौ भने भन।

قُلْ عَسَىٰ أَن يَكُونَ رَدِفَ لَكُم بَعْضُ الَّذِي تَسْتَعْجِلُونَ ﴿٧٢﴾

(७२) उत्तर दिनुस् कि शायद केही ती वस्तुहरु जसको तिमी शीघ्रता गरिराखेका छौ, तिमीसित अत्यन्त निकट भइसकेका होऊन्।[3]

وَإِنَّ رَبَّكَ لَذُو فَضْلٍ عَلَى النَّاسِ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَشْكُرُونَ ﴿٧٣﴾

(७३) तथा निःसन्देह तपाईंको प्रभु सबै मानिसमाथि अत्यन्त कृपालु छन्, परन्तु अधिकतर मानिसहरुले कृतज्ञता व्यक्त गर्दैन।[4]

[1]अर्थात् यसमा कुनै वास्तविकता छैन, मात्र एक-अर्कालाई सुनेर यिनीहरु भन्दै आइराखेका छन्।

[2]यो ती काफ़िरहरुको कथनको उत्तर हो कि प्राचीन समुदायहरुलाई हेरिकन उनीमाथि अल्लाहको प्रकोप आएन, जो पैग़म्बरहरुको सत्यताको प्रमाण हो। यसैप्रकार केयामत तथा त्यसका जीवनको विषयमा पनि हाम्रा रसूल जे भन्दछन्, निःसन्देह सत्य छ।

[3]यसबाट तात्पर्य बद्रका युद्धको त्यो यातना हो, जो हत्या तथा बन्दी गरिनुका रुपमा काफ़िरहरुलाई पुग्यो अथवा कब्रको यातना छ। ردف निकटको अर्थमा छ, यस्तै सवारीको पछाडी सिटमा बस्नेलाइ رديف भनिन्छ।

[4]अर्थात् यातनामा विलम्ब यो पनि अल्लाहको दया तथा कृपाको एक भाग हो, परन्तु तैपनि मानिसहरु मुख फर्काइ कृतघ्नता व्यक्त गर्दछन्।

وَإِنَّ رَبَّكَ لَيَعْلَمُ مَا تُكِنُّ صُدُورُهُمْ وَمَا يُعْلِنُونَ ﴿٧٤﴾

(७४) तथा निःसन्देह तपाईंको प्रभु ती कुराहरु पनि जान्दछ जसलाई तिनीहरु आफ्ना हृदयमा लुकाइराखेका छन् तथा जसलाई प्रकट गरिरहेका छन् ।

وَمَا مِنْ غَائِبَةٍ فِي السَّمَاءِ وَالْأَرْضِ إِلَّا فِي كِتَابٍ مُبِينٍ ﴿٧٥﴾

(७५) आकाश तथा धर्तीको कुनै गुप्त वस्तु पनि यस्तो छैन जो प्रकाशमय खुल्ला किताबमा नहोस् ।[1]

إِنَّ هَٰذَا الْقُرْآنَ يَقُصُّ عَلَىٰ بَنِي إِسْرَائِيلَ أَكْثَرَ الَّذِي هُمْ فِيهِ يَخْتَلِفُونَ ﴿٧٦﴾

(७६) निःसन्देह यो कुरआन इस्राईलका सन्तानका समक्ष ती अधिकतर कुराहरुको वर्णन गरिरहेको छ जसमा यिनीहरु मतभेद गर्दछन् ।[2]

وَإِنَّهُ لَهُدًى وَرَحْمَةٌ لِلْمُؤْمِنِينَ ﴿٧٧﴾

(७७) तथा यो (कुरआन) ईमान भएकाहरुका लागि निःसन्देह मार्गदर्शन एवं कृपा हो ।[3]

إِنَّ رَبَّكَ يَقْضِي بَيْنَهُمْ بِحُكْمِهِ ۚ وَهُوَ الْعَزِيزُ الْعَلِيمُ ﴿٧٨﴾

(७८) तपाईंको प्रभुले उनका बीच आफ्नो आदेशले (सबै) निर्णय गरिदिनेछ,[4] त्यो अत्यन्त प्रभावशाली एवं ज्ञाता छ ।

[1]यसबाट तात्पर्य 'लौहे महफूज' (सुरक्षित पुस्तक) हो । ती नै गुप्त वस्तुहरुमा त्यस प्रकोपको ज्ञान पनि छ जसको लागि ती काफिरहरु शीघ्रता गर्दछन् । परन्तु त्यसको समय पनि अल्लाहले 'सुरक्षित पुस्तक' मा लेखिसकेको छ, जसलाई केवल त्यही जान्दछ तथा अब त्यो समय आउँदछ जुन उसले कुनै समुदायका विनाशका लागि लेखेको छ त त्यस पश्चात त्यसलाई नाश गरिदिइन्छ । यो निर्धारित समय आउनुभन्दा पूर्व शीघ्रता किन गर्दछन् ?

[2]अहले किताब अर्थात् यहूदी तथा इसाई विभिन्न सम्प्रदाय तथा गुटहरुमा विभाजित थिए । उनका विश्वास पनि एक-अर्काबाट भिन्न थिए । यहूदी आदरणीय ईसाको निरादर तथा अपमान गर्दथे तथा इसाई उनको सम्मानमा अतिश्योक्ति, यहाँसम्मकि उहाँलाई अल्लाह अथवा अल्लाहका पुत्र बनाइदिए । कुरआन करीमले उनैको सन्दर्भमा त्यस्ता कुराको वर्णन गरेको छ, जसबाट सत्य स्पष्ट हुनजान्छ तथा यदि उनीहरु कुरआनका वर्णन गरिएको सत्यतालाई स्वीकार गर्दछन् भने उनको आस्थासित सम्बन्धित विरोधको समापन तथा उनका मतभेद एवं भिन्नतामा कमी हुनसक्छ ।

[3]ईमान भएकाहरुलाई विशेष गर्नु यसकारण कि उनी कुरआनबाट लाभान्वित हुन्छन् । उनीहरुमध्ये ती इस्राईलका सन्तान पनि थिए जो ईमान कायम गरेका थिए ।

[4]अर्थात् केयामतका दिन उनका आपसी मतभेदको निर्णय गरी सत्यलाई असत्यबाट अलग गरिदिनेछ तथा त्यसका अनुसार पुरस्कार तथा दण्ड दिने प्रबन्ध गर्नेछ, अथवा

فَتَوَكَّلْ عَلَى اللّٰهِ ۖ اِنَّكَ عَلَى الْحَقِّ الْمُبِيْنِ ﴿٧٩﴾

(७९) अत: तपाईं अल्लाहमाथि नै भरोसा राख्नुस्, नि:सन्देह तपाईं सत्य एवं खुल्ला धर्ममा हुनुहुन्छ ।[1]

اِنَّكَ لَا تُسْمِعُ الْمَوْتٰى وَلَا تُسْمِعُ الصُّمَّ الدُّعَآءَ اِذَا وَلَّوْا مُدْبِرِيْنَ ﴿٨٠﴾

(८०) नि:सन्देह तपाईं मृतकहरुलाई सुनाउन सक्नुहुन्छ तथा न बहिराहरुलाई आफ्नो पुकार सुनाउन सक्नुहुन्छ[2] जबकि उनीहरु पिठ्यूँ फर्काइ विमुख भइराखेका हुन्छन् ।[3]

उनीहरुले आफ्ना किताबहरुमा जे परिवर्तन गरेका छन् संसारमा उनका पर्दा फास गरेर उनका मध्ये निर्णय गरिदिनेछ ।

[1]अर्थात् आफ्नो समस्या उसैलाई समर्पित गरिदिनुस् तथा उसैमा भरोसा गर्नुस्, त्यही तपाईंको सहायता गर्नेछ । एक त यसकारण कि तपाईं सत्य धर्ममा हुनुहुन्छ, दोस्रो कारण अगाडी आउँदैछ ।

[2]यो ती काफ़िरहरुको चिन्ता नगर्नु तथा केवल अल्लाहमा भरोसा राख्नुको दोस्रो कारण यो हो कि यी मानिस मृतक हुन्, जो कसैको कुरा सुनेर लाभ उठाउन सक्दैनन् तथा बहिरा छन्, जो न सुन्दछन् न बुझ्दछन् तथा न मार्ग-प्राप्त हुनेछन् । अर्थात् काफ़िरहरुको उपमा मृतक व्यक्तिसित दियो जसमा संवेदन हुँदैन न बोध तथा बहिराहरुसित जो भाषण तथा शिक्षा सुन्दछन् न अल्लाहतिर आमन्त्रणलाई स्वीकार गर्दछन् ।

[3]अर्थात् उनीहरु सत्यबाट पूर्णतया भाग्दछन् एवं घृणा गर्दछन्, किनभने बहिरा व्यक्ति आफ्नो अगाडी पनि कुनै कुरा सुन्न सक्दैन त त्यस समय के सुन्न सक्नेछ जब विमुख तथा पिठ्यूँ फर्काएका हुनेछ । कुर्‌आन करीमको यस आयतबाट यो पनि ज्ञात भयो कि 'मृतकद्वारा' कुरोको विश्वास कुर्‌आनको विरुद्ध छ । मरेका कुनै व्यक्तिले कुरा सुन्न सक्दैनन् । हो, यसमा केवल ती अवस्थाहरु अलग्ग छन् जहाँ सुन्नुको स्पष्टीकरण कुनै कथनले सिद्ध हुनेछ । जस्तो हदीसमा वर्णित छ कि जब मृतकहरुलाई गाडेर मानिसहरु फर्कन्छन् त त्यो उनका जुत्ताको आहट (आवाज) सुन्छन् । (सहीह बुख़ारी संख्या-३३८, सहीह मुस्लिम संख्या २२०१) अथवा बद्रका युद्धमा मरेका काफ़िरहरुलाई जो बद्रको खाल्डामा फ्याँकिदिइएका थिए, नबी सल्लल्लाहु अलैहि वसल्लमले सम्बोधित गर्नुभयो, जसपश्चात सहाबाले भने कि तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) निर्जीव शरीरहरुसित कुरा गरिराख्नु भएछ । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि यिनीहरु तिमीभन्दा अधिक मेरा कुरा सुनिराखेका छन् । अर्थात् चमत्कारिक रुपले अल्लाह तआलाले उहाँ सल्लल्लाहु अलैहि वसल्लमका कुरा मृतक काफ़िरहरुलाई सुनाइदिए । (सहीह बुख़ारी संख्या १३०७)

وَمَآ أَنتَ بِهَٰدِى ٱلْعُمْىِ عَن ضَلَٰلَتِهِمْ ۖ إِن تُسْمِعُ إِلَّا مَن يُؤْمِنُ بِـَٔايَٰتِنَا فَهُم مُّسْلِمُونَ ﴿٨١﴾

(८१) तथा न तपाईं अन्धाहरुलाई तिनीहरुको पथ-भ्रष्टताबाट हटाएर मार्गदर्शन दिन सक्नुहुन्छ ।[1] तपाईं त केवल उनीहरुलाई सुनाउन सक्नुहुन्छ जो हाम्रा आयतहरुमा ईमान सुदृढ गरेका छन् अनि उनीहरु आज्ञाकारी हुन जान्छन् ।

۞ وَإِذَا وَقَعَ ٱلْقَوْلُ عَلَيْهِمْ أَخْرَجْنَا لَهُمْ دَآبَّةً مِّنَ ٱلْأَرْضِ تُكَلِّمُهُمْ أَنَّ ٱلنَّاسَ كَانُوا۟ بِـَٔايَٰتِنَا لَا يُوقِنُونَ ﴿٨٢﴾

(८२) तथा जब उनीहरुमाथि प्रकोपको वचन सिद्ध हुनेछ,[2] हामीले धर्तीबाट उनका लागि एक पशु निकाल्नेछौं जो उनीसित वार्ता गर्नेछ[3] कि मानिसहरु हाम्रा आयातहरुमा विश्वास गर्दैनथे ।[4]

وَيَوْمَ نَحْشُرُ مِن كُلِّ أُمَّةٍ فَوْجًا

(८३) तथा जुन दिन हामीले प्रत्येक समुदायमध्ये ती मानिसहरुका गुटहरुलाई जसले हाम्रा आयतहरुलाई

---

[1]अर्थात् जसलाई अल्लाह तआला सत्य देख्नुबाट अन्धा गरिदिन्छ, तिनीहरुलाई तपाईं सल्लल्लाहु अलैहि वसल्लम यसप्रकार मार्गदर्शन गर्न सक्नुहुन्न जो उनीहरुलाई अभीष्ट स्थान अथवा ईमानसम्म पुऱ्याइदेओस् ।

[2]अर्थात् जब पुण्यको आदेश दिने तथा नराम्रो कुरोबाट रोक्ने रहने छैन ।

[3]यो दाब्ब: (विचित्र पशु) त्यही हो जुन केयामतका निकट हुनुका लक्षणहरुमध्ये हो, जस्तो कि हदीसमा छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "केयामत त्यस दिनसम्म हुनेछैन जबसम्म तिमी दश लक्षण देख्दैनौ तिनीहरुमध्ये एउटा पशु निस्किनु पनि हो" (सहीह मुस्लिम किताबुल फेतन, बाबु फि आयातिल-लती तकून कब्लस्साअह) अर्को कथन छ, "सर्वप्रथम जुन चिन्ह प्रकट हुनेछ त्यो हो सूर्य पूर्वको साटो पश्चिमबाट उदाउनु तथा पूर्वान्हबाट पहिला जनावर निस्कनु ।" यी दुवैमध्ये जुन पहिला प्रकट हुनेछ यी दोस्रो त्यसको शीघ्र पश्चात नै प्रकट हुनेछ । (सहीह मुस्लिम)

[4]यो जनावर निस्कनुको कारण हो । अर्थात् अल्लाह तआला आफ्नो यो निशानी यसकारण देखाउनेछ कि मानिस अल्लाहका निशानी अथवा आयतहरु (आदेश) मा विश्वास गर्दैनन् । केही ज्ञाताहरु भन्दछन् कि यो वाक्य त्यो जनावर आफ्नो मुखले भन्नेछ । तैपनि त्यस जनावरबाट मनुष्यहरुसित कुरा गर्नुमा कुनै सन्देह छैन किनकि कुरआनले यसलाई स्पष्ट रुपमा भनेको छ ।

مِّمَّن يُكَذِّبُ بِـَٔايَٰتِنَا فَهُمْ يُوزَعُونَ ﴿٨٣﴾

झुठ्लाउँथे घेरेर ल्याउनेछन्, अनि उनीहरु सबैलाई अलग गरिदिनेछन् ।[1]

حَتَّىٰٓ إِذَا جَآءُو قَالَ أَكَذَّبْتُم بِـَٔايَٰتِى وَلَمْ تُحِيطُوا۟ بِهَا عِلْمًا أَمَّاذَا كُنتُمْ تَعْمَلُونَ ﴿٨٤﴾

(८४) जब सबै आइपुग्नेछन् त अल्लाह (तआला) ले भन्नेछ कि तिमीहरुले मेरा आयतहरुलाई यसका उपरान्त कि तिमीहरुलाई उनको पूर्ण ज्ञान थिएन, किन झुठ्लायौ ?[2] तथा यो पनि भन कि तिमी के गर्दै थियौ ?[3]

وَوَقَعَ ٱلْقَوْلُ عَلَيْهِم بِمَا ظَلَمُوا۟ فَهُمْ لَا يَنطِقُونَ ﴿٨٥﴾

(८५) तथा यसकारण कि उनीहरुले अत्याचार गरेका थिए, उनीहरुमाथि कुरा सिद्ध हुनेछ तथा उनीहरु केही बोल्न सक्ने छैनन् ।[4]

أَلَمْ يَرَوْا۟ أَنَّا جَعَلْنَا ٱلَّيْلَ لِيَسْكُنُوا۟ فِيهِ وَٱلنَّهَارَ مُبْصِرًا ۚ إِنَّ فِى ذَٰلِكَ لَـَٔايَٰتٍ لِّقَوْمٍ يُؤْمِنُونَ ﴿٨٦﴾

(८६) के उनीहरु देखिराखेका छैनन् कि हामीले रात्रिलाई यसकारण बनायौं कि उनीहरु यसमा विश्राम गर्न सकून् तथा तिमीलाई हामीले देखाउने (प्रकाशमान) बनाएका छौं,[5] निःसन्देह यसमा ती मानिसहरुका लागि निशानी (लक्षण) छन्, जो ईमान (तथा विश्वास) राख्दछन् ।



[1]अथवा विभिन्न गुटहरुमा विभाजित गरिदिनेछन् अर्थात् व्यभिचारीहरुको गुट, रक्सी खानेहरुको गुट आदि । अथवा यो अर्थ हो कि उनलाई रोकिनेछ अर्थात् उनीहरुलाई यताउता तथा अगाडी-पछाडी हुनबाट रोकिनेछ तथा सबैलाई क्रमले ल्याइ नरकमा फ्याँकिदिइनेछ ।

[2]अर्थात् तिमीले मेरो एकेश्वरवाद तथा आमन्त्रणका तर्कलाई बुझ्ने प्रयत्न नै गरेनौं तथा त्यस विना नै मेरा आयतहरुलाई झुठ्लाउने गर्‍यौ ।

[3]कि जसका कारण मेरा कुराहरुमा विचार गर्नुको अवसर नै पाइएन ।

[4]अर्थात् उनीहरुसित कुनै बहाना हुनेछैन कि जसलाई उनीहरुले प्रस्तुत गर्न सकून् । अथवा केयामतको भयानकताका कारण बोल्ने शक्तिबाट नै बञ्चित हुनेछन् ।

[5]ताकि उनीहरु त्यसमा जीविका आर्जनका लागि दौडधूप गर्न सकून् ।

وَيَوْمَ يُنْفَخُ فِي الصُّورِ فَفَزِعَ مَنْ فِي السَّمٰوٰتِ وَمَنْ فِي الْأَرْضِ إِلَّا مَنْ شَاءَ اللّٰهُ ۚ وَكُلٌّ أَتَوْهُ دٰخِرِينَ ﴿٨٧﴾

तथा जुन दिन नरसिंघा फुकिनेछ त आकाशहरु तथा धर्तीका सबै अत्तालिनेछन्,[१] उनका अतिरिक्त जसलाई अल्लाह चाहन्छ ।[२] तथा सबै विनीत (एवं विवश) भई त्यसका समक्ष उपस्थित हुनेछन् ।

وَتَرَى الْجِبَالَ تَحْسَبُهَا جَامِدَةً وَهِيَ تَمُرُّ مَرَّ السَّحَابِ ۚ صُنْعَ اللّٰهِ الَّذِي أَتْقَنَ كُلَّ شَيْءٍ ۚ إِنَّهُ خَبِيرٌ بِمَا تَفْعَلُونَ ﴿٨٨﴾

(८८) तथा तपाईं पर्वतहरुलाई आफ्नो स्थानमा स्थिर ठान्नु हुन्छ परन्तु तिनीहरु पनि बादल (मेघ) जस्तै उड्नेछन् ।[३] यो हो रचना अल्लाहको जसले प्रत्येक वस्तुलाई सुदृढ बनाएको छ,[४] जे-जति तिमी गर्दछौ, त्यससित त्यो राम्ररी परिचित छ ।

مَنْ جَاءَ بِالْحَسَنَةِ فَلَهُ خَيْرٌ مِنْهَا ۚ وَهُمْ مِنْ فَزَعٍ يَوْمَئِذٍ آمِنُونَ ﴿٨٩﴾

(८९) जुन व्यक्तिले पुण्यका कर्म ल्याउनेछ, त्यसलाई त्यसभन्दा पनि उत्तम प्रतिफल प्राप्त हुनेछ, तथा उनी त्यस दिनको व्यग्रताबाट निर्भय हुनेछन् ।

[१] صــور सित तात्पर्य त्यही नरसिंघा हो जसमा इस्राफील अलैहिस्सलाम अल्लाहको आदेशले फुक्नेछन् । यो फूँक दुई अथवा दुईभन्दा अधिक हुनेछ । प्रथम फूँकमा सम्पूर्ण जगत आत्तिएर मूर्छित हुनेछन्, दोस्रो फूँकमा मरिहाल्नेछन् तथा तेस्रो फूँकमा सबै मानिसहरु कब्रहरु (चिहानबाट) जीवित भई उभिहाल्नेछन् तथा त्यही विद्वानहरुका निकट चौथो फूँक हुनेछ जसमा सबै मानिस हश्रका मैदानमा एकत्रित हुनेछन् । यहाँ कुन चाहि फूँक तात्पर्य छ ? इमाम इब्ने कसीरका निकट यो प्रथम फूँक तथा इमाम शौकानीका निकट तेस्रो फूँक हुनेछ जब मानिसहरु चिहानहरुबाट उठ्नेछन् । (फ़तहुल क़दीर)

[२]यो छुट प्राप्त मानिस को हुनेछन् ? केही ज्ञाताहरुका निकट नबी तथा शहीद, केहीका निकट फरिश्ताहरु तथा केहीका निकट सबै ईमान भएकाहरु हुन् । इमाम शौकानी भन्नुहुन्छ कि सम्भवत: सबै वर्णित व्यक्ति यसमा सम्मिलित छन् किनकि ईमान भएकाहरु वास्तविक घबराहटबाट सुरक्षित हुनेछन् । (जस्तो अगाडी आइराखेको छ)

[३]यो केयामतका दिन हुनेछ कि पर्वत आफ्नो स्थानमा रहने छैनन् बरु बादलहरु जस्तै चल्ने तथा उड्नेछन् ।

[४]अर्थात् यो अल्लाहको महान सामर्थ्यले हुनेछ जसले प्रत्येक वस्तुलाई सुदृढ बनाएको छ । परन्तु त्यसले यी सुदृढ वस्तुहरुलाई पनि कपास जस्तो पारिदिने सामर्थ्य राख्दछ ।

[५]अर्थात् वास्तविक तथा ठूलो घबराहटबाट उनीहरु सुरक्षित हुनेछन् । ﴿لَا يَحْزُنُهُمُ الْفَزَعُ الْأَكْبَرُ﴾ (सूर: अल-अंबिया-१०३)

وَمَن جَآءَ بِالسَّيِّئَةِ فَكُبَّتۡ وُجُوهُهُمۡ فِي النَّارِ هَلۡ تُجۡزَوۡنَ إِلَّا مَا كُنتُمۡ تَعۡمَلُونَ ﴿٩٠﴾

(९०) तथा जो कु-कर्म लिएर आउँछन् उनीहरुलाई टाउको तल पारी आगोमा हुत्याउँछन्। केवल त्यही प्रतिफल दिइनेछौ जुन तिमी गर्दैरहयौ ।

إِنَّمَآ أُمِرۡتُ أَنۡ أَعۡبُدَ رَبَّ هَٰذِهِ الۡبَلۡدَةِ الَّذِي حَرَّمَهَا وَلَهُۥ كُلُّ شَيۡءٖۖ وَأُمِرۡتُ أَنۡ أَكُونَ مِنَ الۡمُسۡلِمِينَ ﴿٩١﴾

(९१) मलाई त केवल यही आदेश दिइएको छ कि म यस नगरको प्रभुको इबादत (उपासना) गरिरहूँ जसले यसलाई आदर (पवित्रता) भएको बनाएको छ ।[1] जसको स्वामित्व प्रत्येक वस्तु छ तथा मलाई यो पनि आदेश दिइएको छ कि म आज्ञाकारीहरु मध्येबाट होऊ ।

وَأَنۡ أَتۡلُوَا الۡقُرۡءَانَۖ فَمَنِ اهۡتَدَىٰ فَإِنَّمَا يَهۡتَدِي لِنَفۡسِهِۦۖ وَمَن ضَلَّ فَقُلۡ إِنَّمَآ أَنَا۠ مِنَ الۡمُنذِرِينَ ﴿٩٢﴾

(९२) तथा म क़ुरआनको पाठ गर्दछु अब जोसुकैले सन्मार्ग ग्रहण गऱ्यो त्यसले आफ्नै लागि सन्मार्ग ग्रहण गर्नेछ। तथा जो विचलित भयो त भनिदिनुस् कि म त केवल सतर्क गराउने हूँ ।[2]

وَقُلِ الۡحَمۡدُ لِلَّهِ سَيُرِيكُمۡ ءَايَٰتِهِۦ فَتَعۡرِفُونَهَاۚ وَمَا رَبُّكَ بِغَٰفِلٍ

(९३) तथा भनिदिनुस् कि सम्पूर्ण प्रशंसा अल्लाहकै लागि छन् ।[3] त्यसले तिमीलाई निकट भविष्यमै आफ्ना निशानीहरु देखाउनेछ ।

[1]यसबाट तात्पर्य मक्का नगर छ । यसको विशेषरुपले वर्णन यसकारण गरिएको छ कि यसमा ख़ाना-ए-काअ़बा छ तथा यही रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई पनि अत्याधिक प्रिय थियो । "पवित्रता भएको" को अर्थ हो कि यसमा रक्तपात गर्न, अत्याचार गर्न, शिकार गर्न, वृक्ष काट्न र यहाँसम्मकि काँडा भाच्न पनि निषेध छ। (बुख़ारी किताबुल जनायेज़, मुस्लिम किताबुल हज्ज़ बाबु तहरीमे मक्का व सैदहा, व अलसुनन)

[2]अर्थात् मेरो कार्य केवल सतर्क गराइदिनु हो। मेरो सतर्क गर्नबाट जो मुसलमान हुनेछ, त्यसमा उसैको लाभ छ कि अल्लाहको यातनाबाट बच्नेछ, तथा जो मेरा आमन्त्रणलाई स्वीकार गर्नेछैन त मेरो के ? अल्लाह तआ़ला स्वयं नै त्यसबाट हिसाब लिनेछ तथा नरकको यातनाको स्वाद चखाउनेछ ।

[3]कि जो कसैलाई त्यस समयसम्म यातना दिंदैन जबसम्म प्रमाण (तर्क) गर्दैन ।

عَمَّا تَعْمَلُونَ ﴿٩٣﴾

जसलाई तिमी स्वयं चिनिहाल्नेछौ ।[1] तथा जे-जति तिमी गरिराखेका छौ, त्यससित तिम्रो प्रभु अचेत छैन ।[2]

## سُورَةُ الْقَصَصِ

## सूरतुल क़सस-२८

सूरः क़सस मक्कामा अवतरित भयो तथा यसमा ८८ आयत तथा ९ रुकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु, जो अत्यन्त दयालु एवं अपार कृपालु हुनुहुन्छ।

طسٓمٓ ﴿١﴾

(१) ता.सीन.मीम.

تِلْكَ آيَاتُ الْكِتَابِ الْمُبِينِ ﴿٢﴾

(२) यी आयत हुन् दिव्य प्रकाश भएको किताबका ।

نَتْلُوا عَلَيْكَ مِن نَّبَإِ مُوسَىٰ وَفِرْعَوْنَ بِالْحَقِّ لِقَوْمٍ يُؤْمِنُونَ ﴿٣﴾

(३) हामीले तपाईंका समक्ष मुसा तथा फ़िरऔंनका सत्य घटना वर्णन गर्दछौं उनीहरुका लागि जो ईमान भएका छन् ।[3]

---

[1] अन्य स्थानमा : ﴿ سَنُرِيهِمْ آيَاتِنَا فِي الْآفَاقِ وَفِي أَنفُسِهِمْ حَتَّىٰ يَتَبَيَّنَ لَهُمْ أَنَّهُ الْحَقُّ ﴾

"हामीले उनीहरुलाई बाहिर जगत तथा त्यसभित्र आफ्ना निशानीहरु देखाउनेछौं ताकि उनलाई सत्य प्रकट हुन जाओस् ।" (सूरः हा.मीम.सजदा-५३)

यदि जीवनमा यी निशानीहरु देखेर ईमान कायम गर्दैनन् त मृत्युका समय त यी निशानीहरु देखेर अवश्य चिन्छन् । परन्तु त्यस समयको पहिचान कुनै लाभ पुऱ्याउँदैन, यसकारण कि त्यस समयको ईमान स्वीकार्य छैन ।

[2] बरु प्रत्येक वस्तुलाई त्यो देखिराखेको छ । यसमा काफ़िरहरुको लागि अत्याधिक चेतावनी तथा ठूलो धम्की छ ।

***सूरः अल-क़ससको व्याख्या:***

[3] यो घटना यस कुराको प्रमाण हो कि तपाईं अल्लाहका सच्चा पैग़म्बर हुनुहुन्छ किनभने अल्लाहको प्रकाशना बिना शताब्दियौं पूर्वका घटनाहरुलाई ठीक त्यसै प्रकारले वर्णन गर्नु जुनप्रकार घटित भयो, असम्भव छ । तैपनि त्यसका उपरान्त यसबाट लाभ केवल ईमान भएकाहरुलाई नै हुनेछ, किनभने तिनैले तपाईंको कुरा मान्नेछन् ।

إِنَّ فِرْعَوْنَ عَلَا فِي الْأَرْضِ وَجَعَلَ أَهْلَهَا شِيَعًا يَسْتَضْعِفُ طَائِفَةً مِّنْهُمْ يُذَبِّحُ أَبْنَاءَهُمْ وَيَسْتَحْيِي نِسَاءَهُمْ ۚ إِنَّهُ كَانَ مِنَ الْمُفْسِدِينَ ④

(४) नि:सन्देह फ़िरऔंनले धर्तीमा उपद्रव मच्चाएको थियो,[१] तथा त्यहाँका मानिसहरुको समूहका गुट बनाएको थियो,[२] उनका एक गुटलाई हीन (दुर्बल) बनाएको थियो,[३] उनका बालकहरुलाई त मारिदिन्थ्यो[४] तथा बालिकाहरुलाई जीवित छाडिदिन्थ्यो। नि:सन्देह त्यो उपद्रवीहरुमध्ये नै थियो।

وَنُرِيدُ أَن نَّمُنَّ عَلَى الَّذِينَ اسْتُضْعِفُوا فِي الْأَرْضِ وَنَجْعَلَهُمْ أَئِمَّةً وَنَجْعَلَهُمُ الْوَارِثِينَ ⑤

(५) तथा पछि हामीले चाहयौं कि उनीमाथि दया गरौं जसलाई धर्तीमा अत्यन्त हीन (दुर्बल) बनाइएको थियो तथा हामीले उनैलाई प्रमुख एवं (धर्ती) का उत्तराधिकारी बनायौं।[५]

[१]अर्थात् अत्याचार तथा क्रुरता चरम सीमामा पुऱ्याएको थियो तथा आफूलाई महा पालन-पोषणकर्ता भन्न लगाउँथ्यो।

[२]जसमाथि भिन्न-भिन्न कार्य सेवाहरु थिए।

[३]यसबाट तात्पर्य इस्राईलका सन्तान हुन् जो त्यस समयको सर्वोत्तम समुदाय थियो, परन्तु परीक्षाका रुपमा फ़िरऔनको दासता तथा त्यसका अत्याचार एवं क्रुरताको लक्ष्य बनेको थियो।

[४]त्यसका कारण केही ज्योतिष शास्त्रीहरुको भविष्यवाणी थियो कि इस्राईलका वंशमा जन्म लिने एउटा बालकको हातबाट फ़िरऔनको विनाश हुनेछ तथा त्यसको राज्यको पतन हुनेछ, जसको समाधान उसले यो निकाल्यो कि प्रत्येक जन्म लिने इस्राइली शिशुलाई मारियोस्। परन्तु त्यस मूर्खले यो सोचेन कि यदि ज्योतिषशास्त्री सत्य भन्दछन् भने यस्तो अवश्य भएर नै रहन्छ चाहे त्यो अबोध शिशुहरुको निर्मम हत्या गरिरहोस् तथा यदि उनीहरु झूठा छन् भने हत्या गराउनुको आवश्यकता छैन। (फ़तहुल क़दीर) केही मानिसहरुको भनाई छ कि आदरणीय इब्राहीमबाट यो शुभ-सूचना प्रचलित भई आइराखेको थियो कि उनका वंशमा एउटा बालक हुनेछ, जसबाट मिस्र राज्यको पतन हुनेछ। किब्तिहरुले यो शुभ-सूचना इस्राईलका सन्तानबाट सुने तथा फ़िरऔनलाई यसबाट अवगत गराए, जसपश्चात उसले इस्राईलका सन्तानका शिशुहरुको निर्मम हत्या गराउन प्रारम्भ गऱ्यो। (इब्ने क़सीर)

[५]अत: यस्तै नै भयो तथा अल्लाह तआलाले यस पतित तथा दास समुदायलाई पूर्व-पश्चिमका उत्तराधिकारी (स्वामी तथा राज्यअधिकारी) बनाइदियो। (सूर: अल-आराफ १३७) यसका अतिरिक्त उनीहरुलाई धर्मको नेतृत्व गर्ने तथा अगुवा पनि बनाइदियौं।

وَنُمَكِّنَ لَهُمْ فِي الْأَرْضِ وَنُرِيَ فِرْعَوْنَ وَهَامَانَ وَجُنُودَهُمَا مِنْهُم مَّا كَانُوا يَحْذَرُونَ ⑥

(६) तथा यो पनि कि उनीहरुलाई धर्तीमा शक्ति एवं अधिकार प्रदान गरौं[1] तथा फिरऔन एवं हामान तथा उनका सेनाहरुलाई त्यो देखायौं जसबाट उनीहरु तर्सिराखेका छन् ।[2]

وَأَوْحَيْنَا إِلَىٰ أُمِّ مُوسَىٰ أَنْ أَرْضِعِيهِ ۖ فَإِذَا خِفْتِ عَلَيْهِ فَأَلْقِيهِ فِي الْيَمِّ وَلَا تَخَافِي وَلَا تَحْزَنِي ۖ إِنَّا رَادُّوهُ إِلَيْكِ وَجَاعِلُوهُ مِنَ الْمُرْسَلِينَ ⑦

(७) तथा हामीले मूसाकि मातालाई प्रकाशना (वह्य) गर्‍यौं[3] कि उसलाई दूध खुवाउँदै गर तथा जब तिमीलाई त्यसको सम्बन्धमा कुनै भय प्रतीत हुन्छ त उसलाई नदीमा बगाइदिनु तथा कुनै भय, शोक एवं दुख नगर्नु ।[4] हामी निःसन्देह उसलाई तिमीतिर फर्काउनेछौं तथा त्यसलाई आफ्ना पैग़म्बरहरुमध्ये बनाउनेछौं ।

[1]यहाँ धर्तीबाट तात्पर्य सीरियाको धर्ती हो, जहाँ उनी कनआनिहरुको धर्तीका उत्तराधिकारी बने किनभने मिस्रबाट निस्के पश्चात इस्राईलको सन्तान फर्केन । والله أعلم

[2]अर्थात् उनलाई जुन भय थियो कि एक इस्राईलीको हातबाट फ़िरऔन तथा उसको देश एवं सेनाको पतन हुनेछ उनीहरुका यस भयलाई हामीले वास्तविक रुपमा देखाइदियौं ।

[3]प्रकाशनासित तात्पर्य यहाँ हृदयमा कुरो पुर्‍याउनु हो, त्यो प्रकाशना होइन जो नबीहरुमाथि फरिश्ताहरुद्वारा गरिन्थ्यो, तथा यदि फरिश्ताहरुद्वारा पनि आएको भए तैपनि मूसाको माताको नबी हुने कुरो सिद्ध हुँदैन, किनभने फरिश्ताहरु कैयन् पटक जनसामान्यका पासमा पनि आउँछन् । जस्तै हदीसमा गन्जा (तालु खुईले), कोढी तथा अन्धाहरुको पासमा फरिश्ताहरु आउने कुरो सिद्ध छ । (सर्वसम्मत हदीस सहीह बुख़ारी किताबु अहादीसिल अम्बिया)

[4]अर्थात् नदीमा डुब्नु अथवा मर्ने कुरोबाट भयभीत नहुनु तथा त्यसको बिछोडको दुख नगर्नु ।

[5]अर्थात् विधिले कि जसबाट त्यसको छुटकारा निश्चित होस् । भनिन्छ कि जब शिशु वधको यो क्रम अधिक भयो त फ़िरऔनका समुदायलाई भय भयो कि कहीं इस्राईलका वंश समाप्त भएर नजाओस् तथा त्यसपछि मेहनतका कार्य हामीले गर्न नपरोस् । यस भयबारे उनीहरुले फ़िरऔनसित वर्णन गरे, जसपश्चात नयाँ आदेश जारी गरियो कि एक वर्ष बच्चाहरु वध गरियून् तथा एक वर्ष नगरियून् । आदरणीय हारुन त्यस वर्ष पैदा भए जुन वर्ष बच्चाहरुको वध हुँदैनथ्यो, जबकि मूसा वध गरिने वर्षमा पैदा भए ।

فَالْتَقَطَهُۥٓ ءَالُ فِرْعَوْنَ لِيَكُونَ لَهُمْ عَدُوًّا وَحَزَنًا ۗ إِنَّ فِرْعَوْنَ وَهَٰمَٰنَ وَجُنُودَهُمَا كَانُوا۟ خَٰطِـِٔينَ ⑧

(८) अन्तमा फिरऔनका कर्मचारीहरुले त्यस बालकलाई उठाए[1] कि अन्ततः यही बालक उनको शत्रु भयो तथा उनका दुखहरुको कारण बन्यो,[2] कुनै सन्देह छैन कि फिरऔन तथा हामान एवं उनका सेना अपराधी नै थिए ।[3]

وَقَالَتِ ٱمْرَأَتُ فِرْعَوْنَ قُرَّتُ عَيْنٍ لِّى وَلَكَ ۖ لَا تَقْتُلُوهُ عَسَىٰٓ أَن يَنفَعَنَآ أَوْ نَتَّخِذَهُۥ وَلَدًا

(९) तथा फिरऔनकी पत्नीले भनी कि यो त मेरो तथा मेरा आँखाको शीतलता हो, यसको हत्या नगर,[4] अधिक सम्भव छ कि यसले हामीलाई कुनै लाभ पुऱ्याओस् अथवा हामीले यसलाई आफ्नै

परन्तु अल्लाह तआलाले उनको सुरक्षाको साधनको प्रबन्ध यसप्रकार गऱ्यो कि प्रथम त उनकी माताको गर्भलाई यसप्रकार प्रकट गरेनन् जुनप्रकार सामान्य गर्भवतीको हुन्छ कि जसबाट फ़िरऔनद्वारा लगाइएका धायाहरुको दृष्टिमा आउन सकोस् । यसप्रकार जन्मको समस्या त सरलताले भइहाल्यो तथा यो घटना सरकारको परिवार नियोजन अधिकारीहरुको ज्ञानमा आएन । परन्तु जन्मका पश्चात वधको भय शेष थियो, जसका निराकरण स्वयं अल्लाह तआलाले हृदयमा बसालिएको कुरोद्वारा मूसाकी मातालाई बुझाइदियो, अतः तिनले त्यसलाई एउटा सन्दूकमा पल्टाएर नील नदीमा हालिदिइन् । (इब्ने कसीर)

[1]यो सन्दूक बग्दै-बग्दै फ़िरऔनको राजभवनसम्म पुग्यो, जुनकि नदीको निकट नै थियो तथा त्यहाँ फ़िरऔनका कर्मचारीहरुले समातेर बाहिर निकाले ।

[2]यो لام परिणामवाची हो अर्थात् तिनले त त्यसलाई आफ्नो तथा आँखाको शीतलता वनाएर राखिहालेका थिइन् न कि शत्रु ठानेर । परन्तु परिणाम उनको यस कर्मको यो भयो कि त्यो उनका शत्रु तथा शोक एवं दुखको कारण सिद्ध भयो ।

[3]यो पूर्वोक्तको कारण हो कि मूसा उनका लागि शत्रु किन सिद्ध भए ? यसकारण कि ती सबै अल्लाहका अवज्ञाकारी तथा पापी थिए । अल्लाहले दण्ड स्वरुप त्यसको पालन-पोषण गरिएकोलाई नै उनीहरुको विनाशको साधन बनाइदिए।

[4]यो त्यस समय भनिन् जब तिनले सन्दूकमा सुन्दर आकर्षक शिशु देखिन् । केही ज्ञाताहरुको भनाई छ कि यो त्यस समयको कथन हो जब मूसाले फ़िरऔनको दाह्री तानेका थिए त फ़िरऔनले उनलाई वध गर्ने आदेश दिएको थियो । (ऐसरुत्तफ़ासीर) बहुवचनको शब्द या त एक्लो फ़िरऔनको लागि सम्मान स्वरुप भनिएको छ अथवा सम्भव छ कि त्यहाँ त्यसका केही दरबारियाहरु उपस्थित रहेका होऊन् ।

وَّهُمۡ لَا يَشۡعُرُوۡنَ ۝٩

पुत्र बनाइहाल[1] तथा यिनीहरुको बुद्धि नै थिएन ।[2]

وَ اَصۡبَحَ فُؤَادُ اُمِّ مُوۡسٰى فٰرِغًا ؕ اِنۡ كَادَتۡ لَـتُبۡدِىۡ بِهٖ لَوۡلَاۤ اَنۡ رَّبَطۡنَا عَلٰى قَلۡبِهَا لِتَكُوۡنَ مِنَ الۡمُؤۡمِنِيۡنَ ۝١٠

(१०) तथा मूसा (अलैहिस्सलाम) कि माताको हृदय व्याकुल भइहाल्यो,[3] निकट थियो कि यस (वास्तविकता) लाई बिल्कुलै स्पष्ट गरिदिन्थिन् यदि हामीले उनको हृदयलाई भरोसा नदिएको भए, यो यसकारण कि त्यो विश्वास गर्नेहरुमध्ये रहोस् ।[4]

وَ قَالَتۡ لِاُخۡتِهٖ قُصِّيۡهِ ۫ فَبَصُرَتۡ بِهٖ عَنۡ جُنُبٍ وَّهُمۡ لَا يَشۡعُرُوۡنَ ۝١١

(११) मूसा (अलैहिस्सलाम) कि माताले त्यसकी बहिनीसित[5] भनिन् कि तिमी यसको पछि-पछि जाउ, त तिनले त्यसलाई टाढैबाट हेर्दै गरिन्[6] तथा फ़िरऔनका मानिसहरुलाई यसको आभास पनि भएन ।

وَحَرَّمۡنَا عَلَيۡهِ الۡمَرَاضِعَ مِنۡ قَبۡلُ

(१२) तथा त्यो पुग्नुभन्दा पूर्व हामीले मूसाको लागि धायाहरुको दूध निषेध (हराम) गरिदिएका थियौं,[7] त्यो

[1]किनभने फ़िरऔनको सन्तान थिएन ।

[2]कि यो बालक, जसलाई उनीहरुले आफ्नो बालक बनाइराखेका छन्, यो त त्यही बालक हो जसलाई मार्नको लागि सयौं बालकहरुलाई मारिसकिएको छ ।

[3]अर्थात् तिनको हृदय प्रत्येक वस्तु एवं चिन्ताले शून्य भइहाल्यो तथा एउटै चिन्ता अर्थात् मूसा अलैहिस्सलामको दुख हृदयमा व्याप्त भयो, जसलाई व्याकुलता भनिन्छ ।

[4]अर्थात् अत्याधिक दुखका कारण यो प्रकट गरिदिइने थिइन् कि यो तिनको पुत्र हो परन्तु अल्लाहले उनको हृदयलाई दृढ गरिदियो, जसमा तिनले धैर्य गरिन् तथा विश्वास गरिन् कि अल्लाहले यस मूसालाई सकुशल फिर्ता गर्ने जुन वचन दिएको छ, त्यो पूर्ण हुनेछ ।

[5]मूसाकी दिदीको नाम मरियम बिन्ते इमरान थियो जुनप्रकार कि आदरणीय ईसाकी माताको नाम मरियम बिन्ते इमरान थियो । नाम तथा पिताको नाम दुबैमा समानता थियो ।

[6]अत: तिनले नदीको किनार हुँदै हेर्दैरहिन् यहाँसम्मकि तिनले देखिहालिन् कि त्यसको भाई फ़िरऔनको महलमा गइहालेछ ।

[7]अर्थात् हामीले आफ्नो सामर्थ्य तथा उत्पत्यादेशद्वारा मूसालाई आफ्नी माताकी अतिरिक्त कुनै अन्य धायाको दूध पिउनबाट रोकिदियौं, अत: अत्यन्त प्रयत्नका उपरान्त कुनै धाया उनलाई दूध खुवाउन तथा शान्त गर्नमा सफल हुनसकेन ।

فَقَالَتْ هَلْ اَدُلُّكُمْ عَلٰۤى اَهْلِ بَيْتٍ يَّكْفُلُوْنَهٗ لَكُمْ وَهُمْ لَهٗ نٰصِحُوْنَ ﴿١٢﴾

भन्नथाली कि के म तिमीलाई[1] यस्तो परिवार भनूँ जो यस बालकको पालन-पोषण तिम्रो निम्ति गरुन् तथा यस बालकका शुभ-चिन्तक पनि होऊन् ।

فَرَدَدْنٰهُ اِلٰۤى اُمِّهٖ كَيْ تَقَرَّ عَيْنُهَا وَلَا تَحْزَنَ وَلِتَعْلَمَ اَنَّ وَعْدَ اللّٰهِ حَقٌّ وَّلٰكِنَّ اَكْثَرَهُمْ لَا يَعْلَمُوْنَ ﴿١٣﴾

(१३) त हामीले त्यसलाई त्यसकी मातातिर वापस पुऱ्याइदियौं[2] ताकि त्यसका आँखा शीतल रहून् तथा दुखी नहोस् तथा जानीहालोस् कि अल्लाहको वचन सत्य छ ।[3] परन्तु अधिकतर मानिसहरु जान्दैनन् ।[4]

[1]यो सारा दृष्य उनकी दिदी शान्तिपूर्वक हेरिराखेकी थिइन् र अन्तमा भनिहालिन् कि म तिमीलाई यस्ता परिवार भनूँ जो एक बच्चाको तिम्रो लागि पालन-पोषण गरोस्।

[2]अतः उनले मूसाकी दिदीसित भने कि जाउ त्यस महिलालाई लिएर आउ । अतः उनी दगुर्दै गइन् तथा आफ्नी मातालाई, जो मूसाकी पनि माता थिइन्, साथमा ल्याइन् ।

[3]जब आदरणीय मूसाले आफ्नी माताकी दूध पिईहाले त फ़िरऔनले मूसाकी मातासित महलमा निवास गर्न प्रार्थना गऱ्यो ताकि बालकको उचित पालन-पोषण हुनसकोस् । परन्तु तिनले भनिन् कि म आफ्नो पति तथा बच्चाहरुलाई छाडेर यहाँ रहन सक्दिन । अन्त्यमा यो तय भयो कि तिनी आफ्नो साथ बच्चालाई आफ्नो घर लगून् तथा त्यसको त्यहीं पालन-पोषण गरुन् तथा यसको पारिश्रमिक तिनलाई राज्यकोषबाट दिइनेछ । अल्लाहकै लागि सारा प्रशंसाहरु छन् ? अल्लाहका सामर्थ्यबारे के भन्नु, दूध आफ्नो पुत्रलाई खुवाऊन् तथा वेतन फ़िरऔनबाट प्राप्त गरून् । प्रभुले मूसालाई वापस फर्काउने वचन कति सुन्दर विधिले पूर्ण गरेर देखायो । ﴿فَسُبْحٰنَ الَّذِيْ بِيَدِهٖ مَلَكُوْتُ كُلِّ شَيْءٍ﴾ एक वर्णनमा छ, "त्यस कारीगरको तुलना, जो आफूले बनाइएका वस्तुहरुमा पुण्य तथा शुभको विचार पनि राख्दछ मूसाकी माताको समान छ, जो आफ्नै पुत्रलाई दूध खुवाउँछिन् तथा त्यसको मुल्य पनि प्राप्त गर्छिन् ।" (मरासिल अबू दाऊद)

[4]अर्थात् धेरैजसो कार्य यस्ता हुन्छन् जसका परिणामको वास्तविकतासित अधिकतर मानिस अनभिज्ञ हुन्छन् परन्तु अल्लाहलाई त्यसका राम्रा परिणामको ज्ञान हुन्छ । यसैकारण अल्लाहले भन्नुभयो (हुनसक्छ जुन वस्तुलाई तिमी नराम्रो ठान्दछौ त्यसमा तिम्रो लागि भलाई होस् तथा जसलाई तिमी प्रिय ठान्दछौ त्यसमा तिम्रै लागि नराम्रोको पक्ष होस्) (सूरः अल-बक़र २१६) अन्य स्थानमा भन्नुभयो (हुनसक्छ तिमी कुनै कुरालाई नराम्रो ठानौ, तथा अल्लाह त्यसमा तिम्रो लागि अत्याधिक भलाई उत्पन्न गरिदेओस्) (सूरः अल-निसा-१९)

وَلَمَّا بَلَغَ أَشُدَّهُۥ وَٱسْتَوَىٰٓ ءَاتَيْنَٰهُ حُكْمًا وَعِلْمًا ۚ وَكَذَٰلِكَ نَجْزِى ٱلْمُحْسِنِينَ ﴿١٤﴾

(१४) तथा जब मूसा (अलैहिस्सलाम) आफ्नो युवा अवस्थामा पुगे तथा पूर्णरुपमा सबल भए, हामीले उनलाई हिकमत (बुद्धि) तथा ज्ञान प्रदान गऱ्यौं,[१] पुण्य गर्नेहरुलाई हामी यसैप्रकार प्रतिफल दिने गर्दछौं ।

وَدَخَلَ ٱلْمَدِينَةَ عَلَىٰ حِينِ غَفْلَةٍ مِّنْ أَهْلِهَا فَوَجَدَ فِيهَا رَجُلَيْنِ يَقْتَتِلَانِ هَٰذَا مِن شِيعَتِهِۦ وَهَٰذَا مِنْ عَدُوِّهِۦ ۖ فَٱسْتَغَٰثَهُ ٱلَّذِى مِن شِيعَتِهِۦ عَلَى ٱلَّذِى مِنْ عَدُوِّهِۦ فَوَكَزَهُۥ مُوسَىٰ فَقَضَىٰ عَلَيْهِ ۖ قَالَ هَٰذَا مِنْ عَمَلِ ٱلشَّيْطَٰنِ ۖ إِنَّهُۥ عَدُوٌّ مُّضِلٌّ مُّبِينٌ ﴿١٥﴾

(१५) तथा (मूसा) एउटा यस्तो समयमा नगरमा आए जबकि नगरका मानिसहरु निद्रामा थिए ।[२] यहाँ दुई व्यक्तिहरुलाई झगडा गरिराखेको पाए, यो एक त त्यसका गुटहरुमध्ये थियो तथा दोस्रो उसका शत्रुहरुमध्ये,[३] उसका समुदायका मानिसहरुले त्यसका विरुद्ध जो त्यसका शत्रुहरुमध्ये थियो, त्यसबाट सहायता माँग्यो, जसपश्चात मूसाले त्यसलाई मुड्किले हाने जसबाट त्यो मऱ्यो, मूसाले भने कि यो त शैतानी कार्य हो ।[४] निःसन्देह शैतान शत्रु तथा खुला रुपमा बहकाउमा पार्नेवाला हो ।[५]

(यसकारण मनुष्यको भलाई (हीत) यसैमा छ कि त्यसले आफ्ना प्रिय तथा अप्रियलाई अलग गर्दै प्रत्येक मामिलामा अल्लाह तआला तथा रसूलका आदेशहरुको पालन गरोस् कि यसैमा त्यसको लागि भलाई तथा शुभ परिणाम छ ।

[१]हिक्मत तथा ज्ञानबाट तात्पर्य यदि नबूअत छ भने त्यस स्थानसम्म कसरी पुगे, त्यसको विवरण आगामी आयतमा छ । केही व्याख्याकारहरुका निकट यसबाट तात्पर्य नबूअत होइन बरु समझ-बुझ तथा त्यो ज्ञान हो जुन उनले पारिवारिक वातावरणमा रही सिके ।

[२]यसबाट केही व्याख्याकारले मग़रिब (सन्ध्याकाल) तथा ईशा (रात्रि) को मध्ये समय तथा केहीले मध्यान्ह तात्पर्य लिएका छन् जब मानिसहरु विश्राम गरिराखेका हुन्छन् ।

[३]अर्थात् फिरऔनको सम्प्रदाय किब्तमध्ये थियो ।

[४]यसलाई शैतानी दानवको कर्म यसकारण भनिएको छ कि हत्या एक महाअपराध हो, तथा आदरणीय मूसाको उद्देश्य कदापि हत्या गर्नु थिएन ।

[५]जसको मानवसित शत्रुता पनि प्रकट हुन्छ तथा मनुष्यलाई पथ-विचलनको लागि जे-जे प्रयत्न गर्दछ, त्यो गुप्त छैन ।

قَالَ رَبِّ إِنِّي ظَلَمْتُ نَفْسِي فَاغْفِرْ لِي فَغَفَرَ لَهُ ۚ إِنَّهُ هُوَ الْغَفُورُ الرَّحِيمُ ⑯

(१६) त्यस पश्चात उनले प्रार्थना गर्नलागे कि हे प्रभु ! मैले त स्वयं आफूमाथि अत्याचार गरें, तिमी मलाई क्षमा गरिदेउ ।[1] अल्लाह (तआला) ले उसलाई क्षमा गरिदियो, निःसन्देह त्यो क्षमाशील तथा अत्यन्त दयालु छ ।

قَالَ رَبِّ بِمَا أَنْعَمْتَ عَلَيَّ فَلَنْ أَكُونَ ظَهِيرًا لِلْمُجْرِمِينَ ⑰

(१७) भने हे मेरो प्रभु ! जस्तो तिमीले ममाथि यो दया गर्‍यौ म पनि अब कुनै पापीको सहयोगी बन्ने छैन ।[2]

فَأَصْبَحَ فِي الْمَدِينَةِ خَائِفًا يَتَرَقَّبُ فَإِذَا الَّذِي اسْتَنْصَرَهُ بِالْأَمْسِ يَسْتَصْرِخُهُ ۚ قَالَ لَهُ مُوسَىٰ إِنَّكَ لَغَوِيٌّ مُبِينٌ ⑱

(१८) अनि बिहानै तर्सदैं[3] समाचार लिन नगरमा गए कि सहसा त्यही व्यक्ति जसले हिजो उनीसित सहायता माँगेको थियो, उनीसित विन्ती गरिराखेको छ । मूसाले त्यससित भने कि यसमा सन्देह छैन कि तिमी त स्पष्ट रुपमा पथभ्रष्ट छौ ।[4]

فَلَمَّا أَنْ أَرَادَ أَنْ يَبْطِشَ بِالَّذِي

(१९) पछि जब आफ्नो तथा त्यसको शत्रुलाई समात्न चाहे[5] त्यो प्रार्थी भन्न

[1]यो अकस्मात हत्या यद्यपि महापाप थिएन, किनभने महापापबाट अल्लाह तआला आफ्ना पैगम्बरलाई सुरक्षित राख्दछ । तैपनि यो यस्तो पाप प्रत्येक रुपले थियो जसको लागि अत्याधिक क्षमा-याचना उनले आवश्यक ठाने । अर्को कुरो उनलाई भय थियो कि यदि फ़िरऔनलाई यसको सूचना प्राप्त भयो भने त्यसको प्रतिशोध स्वरुप त्यसले वध नगरिदेओस् ।

[2]अर्थात् जो काफ़िर तथा तिम्रा आदेशहरुको विरोधी हुनेछ, तिमीले ममाथि जुन उपकार गरेका छौ, त्यसको कारण मैले त्यसको सहायता गर्ने छैन । केही व्याख्याकारहरुले यस उपकारबाट तात्पर्य त्यस पापको क्षमालाई लिएका छन् जो अनैच्छिक रुपमा किब्तीको हत्याको रुपमा उनीबाट भएको थियो ।

[3] خائفًا को अर्थ तर्सदैं يترقب यताउता चियाउँदै तथा आफ्नो विषयमा भयभीत ।

[4]अर्थात् आदरणीय मूसाले झपारे कि तिमी हिजो पनि लड्दै पाइएका थियौ, तथा आज पुनः अर्कोसित लडिराखेका छौ, तिमी त स्पष्ट रुपले मार्गमा छैनौ अर्थात झगडालु हौ ।

[5]अर्थात् आदरणीय मूसाले चाहे कि किब्तीलाई समातिहालून्, किनकि त्यही आदरणीय मूसा तथा इस्राईलका सन्तानको शत्रु थियो, ताकि लडाई अगाडी नबढोस् ।

هُوَعَدُوٌّ لَّهُمَا ۙ قَالَ يٰمُوْسٰۤى اَتُرِيْدُ اَنْ تَقْتُلَنِىْ كَمَا قَتَلْتَ نَفْسًۢا بِالْاَمْسِ ۖ اِنْ تُرِيْدُ اِلَّاۤ اَنْ تَكُوْنَ جَبَّارًا فِى الْاَرْضِ وَمَا تُرِيْدُ اَنْ تَكُوْنَ مِنَ الْمُصْلِحِيْنَ ﴿١٩﴾

लाग्यो[1] कि हे मूसा ! कि जुनप्रकार तिमीले हिजो एक व्यक्तिको हत्या गरेका छौ मलाई पनि मार्न चाहन्छौ, तिमी त देशमा अत्याचारी एवं उपद्रवी बन्न नै चाहन्छौ तथा तिम्रो यो विचार नै छैन कि सन्धि गर्नेहरुमध्ये होऊ ।

وَجَآءَ رَجُلٌ مِّنْ اَقْصَا الْمَدِيْنَةِ يَسْعٰى ۫ قَالَ يٰمُوْسٰۤى اِنَّ الْمَلَاَ يَاْتَمِرُوْنَ بِكَ لِيَقْتُلُوْكَ فَاخْرُجْ اِنِّىْ لَكَ مِنَ النّٰصِحِيْنَ ﴿٢٠﴾

(२०) र नगरको टाढाको किनारबाट दगुर्दै एउटा व्यक्ति आयो[2] तथा भन्नलाग्यो कि हे मूसा ! यहाँका प्रमुखहरु तिम्रो हत्याबारे परामर्श गरिराखेका छन्, अतः तिमी (अति शीघ्र) गइहाल, मलाई आफ्नो शुभचिन्तक मान ।

فَخَرَجَ مِنْهَا خَآئِفًا يَّتَرَقَّبُ ۫ قَالَ رَبِّ نَجِّنِىْ مِنَ الْقَوْمِ الظّٰلِمِيْنَ ﴿٢١﴾

(२१) अतः मूसा त्यहाँबाट भयभीत भई आफूलाई बचाउँदै भागे,[3] भने हे प्रभु ! मलाई अत्याचारीहरुको गुटबाट बचाइहाल ।[4]

[1]वादी (इस्राईली) ले ठाने कि मूसाले शायद उसलाई समात्न थालेछन्, त त्यसले भन्यो कि हे मूसा ! أَتُرِيدُ أَن تَقْتُلَنِي "के तिमी मलाई मार्न चाहन्छौ ? जसबाट किब्तीलाई थाहा भयो कि यो जुन हत्या भएको थियो, त्यसको हत्यारा मूसा हो । त्यो गई फिरऔनलाई सूचित गरिदियो, जसपश्चात फिरऔनले त्यसको प्रतिशोधमा मूसाको वध गर्न निश्चित गर्‍यो ।

[2]यो मानिस को थियो ? केही ज्ञाताहरुको निकट यो फ़िरऔनको वंशबाट थियो, जो गुप्त रुपमा आदरणीय मूसाको शुभ-चिन्तक थियो । तथा स्पष्ट कुरो छ कि सरदारहरुका (प्रमुख) विचारको सूचना यस्तै मानिसबाट आउनु अधिक अनुमानित कुरो छ । केही व्याख्याकारहरुका निकट यो आदरणीय मूसाको सम्बन्धि तथा इस्राईली थियो । टाढाको किनारबाट तात्पर्य मुन्फ़ हो जहाँ फ़िरऔनको भवन तथा राजधानी थियो तथा यो नगरको अन्तिम छेउमा थियो ।

[3]जब आदरणीय मूसालाई यो ज्ञात भयो त त्यहाँबाट निस्किहाले ताकि फ़िरऔनको पकडमा आउन नसकून् ।

[4]अर्थात् फ़िरऔन तथा उसका दरबारियाहरुबाट, जसले आपसी विचार-विमर्शबाट आदरणीय मूसाको हत्याको परामर्श गरेका थिए । भनिन्छ कि आदरणीय मूसालाई कुनै ज्ञान थिएन कि कहाँ जानुछ ? किनभने मिश्र छाड्ने यो दुर्घटना आकस्मिक भएको थियो । पहिलाबाट कुनै विचार तथा योजना थिएन,

وَلَمَّا تَوَجَّهَ تِلْقَآءَ مَدْيَنَ قَالَ عَسٰى رَبِّيٓ أَن يَهْدِيَنِى سَوَآءَ ٱلسَّبِيلِ ﴿٢٢﴾

(२२)तथा जब 'मदयन' तिर जानलागे त भने कि मलाई विश्वास छ कि मेरो प्रभुले मलाई सोझो मार्गमा लग्नेछ ।[1]

وَلَمَّا وَرَدَ مَآءَ مَدْيَنَ وَجَدَ عَلَيْهِ أُمَّةً مِّنَ ٱلنَّاسِ يَسْقُونَ وَوَجَدَ مِن دُونِهِمُ ٱمْرَأَتَيْنِ تَذُودَانِ قَالَ مَا خَطْبُكُمَا قَالَتَا لَا نَسْقِى حَتّٰى يُصْدِرَ ٱلرِّعَآءُ وَأَبُونَا شَيْخٌ كَبِيرٌ ﴿٢٣﴾

(२३) मदयनको पानी (को ठाउँमा) जब उहाँ पुग्नुभो त देख्नुभयो कि मानिसहरुको एउटा समूह त्यहाँ पानी पिलाइराखेको छ[2] तथा दुई महिला अलग्गै उभी (आफ्ना पशुहरुलाई) रोकिराखेका देखिए, सोध्नुभयो कि तिम्रो के समस्या छ,[3] तिनीहरुले भने कि जबसम्म यी गोठालाहरु वापस फर्कन्नन् हामी पानी खुवाउँदैनौं[4] तथा हाम्रा पिता निकै बृद्ध छन् ।[5]

فَسَقٰى لَهُمَا ثُمَّ تَوَلّٰىٓ إِلَى ٱلظِّلِّ فَقَالَ رَبِّ إِنِّى لِمَآ أَنزَلْتَ إِلَىَّ

(२४) अत: उहाँले स्वयं ती (पशुहरु) लाई पानी खुवाउनु भयो तथा छायाँतिर फर्के ।

अत: अल्लाहले घोडामा सवार एउटा फरिश्तालाई पठायो, जसले उनलाई मार्ग देखायो । والله أعلم (इब्ने कसीर)

[1]अत: अल्लाहले उनको यो प्रार्थना स्वीकार गर्नुभयो तथा यस्तो सोझो मार्गतिर उनको मार्गदर्शन गर्नुभयो जसबाट उनको संसार पनि सुध्रयो तथा आख़िरत पनि अर्थात् उनी मार्गदर्शक पनि बने तथा मार्ग पाउने पनि, स्वयं पनि मार्गदर्शित तथा अन्य अरुहरुलाई मार्गदर्शन गर्ने ।

[2]अर्थात् जब मदयन पुगे त देखे कि त्यसको घाट (इनारमा) वरिपरि मानिसहरुको भीड छ, जो आफ्ना पशुहरुलाई पानी खुवाइराखेका छन् । मदयन यो क़बीला (प्रजाति) को नाम थियो तथा आदरणीय इब्राहीमको सन्तान मध्येबाट थियो, जबकि आदरणीय मूसा याकूबको वंशबाट थिए जो आदरणीय इब्राहीमका पौत्र (आदरणीय इसहाकका पुत्र) थिए । यसप्रकार मदयनवासीहरु तथा मूसाका बीच वंशीय सम्बन्ध पनि थिए । (ऐसरुत्तफ़सीर) तथा यही आदरणीय शोएबको निवास स्थान एवं नबूअत (दूतत्व) को क्षेत्र पनि थियो ।

[3]दुई स्त्रीहरुलाई आफ्ना पशुहरुलाई रोकि उभेको देखेर आदरणीय मूसाको हृदयमा दया आयो तथा उनीसित सोधे कि के कुरो छ कि तिमी आफ्नो पशुहरुलाई पानी खुवाउँदैनौं?

[4]ताकि पुरुषहरुसित हाम्रो मिश्रण नहोस् । رِعَاء शब्द رَاعٍ (गोठाला) को बहुवचन हो ।

[5]यसकारण तिनीहरु घाटमा स्वयं पानी खुवाउनका लागि आउन सक्दैनन् ।

مِنْ خَيْرٍ فَقِيرٌ ﴿٢٤﴾

तथा भने कि हे प्रभु ! तिमी जे-जति भलाई मतिर उतार्दछौ म त्यसको आकांक्षी छु ।[1]

فَجَاءَتْهُ إِحْدَاهُمَا تَمْشِي عَلَى اسْتِحْيَاءٍ قَالَتْ إِنَّ أَبِي يَدْعُوكَ لِيَجْزِيَكَ أَجْرَ مَا سَقَيْتَ لَنَا ۚ فَلَمَّا جَاءَهُ وَقَصَّ عَلَيْهِ الْقَصَصَ قَالَ لَا تَخَفْ ۖ نَجَوْتَ مِنَ الْقَوْمِ الظَّالِمِينَ ﴿٢٥﴾

(२५) त्यतिखेर ती दुई महिलाहरुमध्ये एउटी उनीतिर लज्जा मान्दै आइ[2] तथा भनी कि मेरो पिता तपाईंलाई बोलाइराखेका छन् ताकि तपाईंले जुन हाम्रा (पशुहरु) लाई पानी खुवाउनु भएछ त्यसको पारिश्रमिक देऊन्,[3] जब (आदरणीय मूसा) उनको पासमा पुगे त उनीसित उनलाई आफ्नो सारा कथा सुनाए त उनले भने

[1]आदरणीय मूसा यति लामो यात्रा गरी मिश्रबाट मदयन पुगेका थिए, खानलाई केही थिएन जबकि यात्राको थकान तथा भोकले व्याकुल थिए । अत: पशुहरुलाई पानी खुवाएर एक वृक्षको छायाँमा आइ प्रार्थना गर्नथाले । خير कैयन् कुराका लागि प्रयोग गरिन्छ, खानको लागि, राम्रा कार्यको लागि, उपासनाको लागि, शक्ति बल तथा धनको लागि । (ऐसरुत्तफ़ासीर) यहाँ यसको प्रयोग खानको लागि भएको छ । अत: मलाई यस समय भोजनको आवश्यकता छ ।

[2]अल्लाहले आदरणीय मूसाको प्रार्थना स्वीकार गऱ्यो तथा दुवैमध्ये एउटी केटी उनलाई बोलाउन आइ । केटीको लज्जाको कुर्आनमा विशेषरुपले वर्णन छ कि यो स्त्रीको मूल आभूषण हो । पुरुषहरुको जस्तो लज्जा तथा पर्दाबाट निश्चितन्ता तथा निर्लज्जता स्त्रीका लागि धार्मिक नियमहरुका अनुसार प्रिय छैनन् ।

[3]केटीहरुको पिता को थिए ? कुर्आन करीमले स्पष्टरुपले नाम लिएको छैन । व्याख्याकारहरुको बहुमतले यसबाट तात्पर्य आदरणीय शोएब अलैहिस्सलामलाई लिएको छ जो मदयनवासीहरुका लागि नबी (ईशदूत) पठाइएका थिए । इमाम शौकानीले पनि यसै कथनलाई मान्यता दिएका छन् । परन्तु इमाम कसीर भन्नुहुन्छ कि आदरणीय शोएबको नबूअतको समय आदरणीय मूसाभन्दा धेरै पूर्वको हो । यसकारण यहाँ आदरणीय शोएबको कुनै सम्बन्धि अथवा शोएबको समुदायको व्यक्ति तात्पर्य छ والله أعلم ।। अत: आदरणीय मूसाले केटीहरुसित जुन दयाभाव तथा उपकार गरेका थिए, त्यो केटीहरुले वृद्ध पितासित भने, जसबाट पिताको हृदयमा पनि त्यो भावना उत्पन्न भयो कि उपकारको साटो उपकारसित दिइयोस् अथवा त्यसको परिश्रमको पारिश्रमिक नै तिरियोस् ।

कि अब नतर्स, तिमीले अत्याचारी समुदायबाट छुटकारा पाइहाल्यौ ।[1]

قَالَتۡ إِحۡدَىٰهُمَا يَٰٓأَبَتِ ٱسۡتَـٔۡجِرۡهُۖ إِنَّ خَيۡرَ مَنِ ٱسۡتَـٔۡجَرۡتَ ٱلۡقَوِيُّ ٱلۡأَمِينُ ٢٦

(२६) कि दुबैमध्ये एउटीले भनी कि हे पिताजी ! तपाईं तिनलाई ज्यालामा राख्नु किनकि जसलाई तपाईं पारिश्रमिकमा राख्नुहुन्छ उनीमध्ये सबभन्दा उत्तम त्यो छ जो बलवान् एवं इमान्दार छ ।[2]

قَالَ إِنِّيٓ أُرِيدُ أَنۡ أُنكِحَكَ إِحۡدَى ٱبۡنَتَيَّ هَٰتَيۡنِ عَلَىٰٓ أَن تَأۡجُرَنِي ثَمَٰنِيَ

(२७) त्यस (बृद्ध) ले भन्यो कि म आफ्नी यी दुई पुत्रीहरुमध्ये एउटीलाई तपाईंको विवाहमा दिन चाहन्छु[3] यस [महर (स्त्रीधन)] मा कि तपाईं

[1]अर्थात् आफ्नो मिश्रको घटना तथा फ़िरऔनका अत्याचार एवं क्रुरताको कथा सविस्तार सुनाए, जसपश्चात उनले भने कि यो क्षेत्र फ़िरऔंनको राज्य सीमाभन्दा बाहिर छ । यसकारण भयभीत हुने आवश्यकता छैन । अल्लाह तआ़लाले (अत्याचारीहरुबाट मुक्ति प्रदान गरिदिएको छ ।

[2]केही व्याख्याकारहरुले लेखेका छन् कि पिताले पुत्रीहरुसित सोधे कि तिमीलाई कसरी ज्ञात छ कि यो शक्तिशाली पनि छ तथा इमान्दार पनि । जसपश्चात पुत्रीहरुले भने कि जुन इनारबाट पानी खुवायो त्यसमाथि यति भारी पत्थर राखिएको थियो कि त्यसलाई उचाल्नका लागि दस मनुष्यहरुको आवश्यकता हुन्छ, परन्तु हामीले देख्यौं कि त्यस व्यक्तिले एक्लै उचालिहालेको थियो तथा पछि राखिदियो । त्यसैप्रकार जब म त्यसलाई बोलाएर आफ्नो साथमा ल्याइराखेकी थिए, त किनभने मार्गको ज्ञान मलाई नै थियो, म अघि-अघि हिंडिराखेकी थिए तथा यो पछि-पछि, परन्तु हावाको कारण मेरा चादर (शल) उड्थ्यो त यस व्यक्तिले भने कि तिमी पछि आउ म अघि-अघि हिंड्छु ताकि मेरो दृष्टि तिम्रो शरीरको कुनै अंगमा नपरोस् । मार्गको संकेतका लागि पछाडीबाट ढुङ्गा, कंकरी आदि हान्ने गर । والله أعلم بحال صحته (इब्ने कसीर)

[3]हाम्रो देशमा कुनै केटीवालाको तर्फबाट विवाहको इच्छा व्यक्त गर्नु अप्रिय ठानिन्छ । परन्तु अल्लाहका धार्मिक नियमहरुमा यो घृणित कार्य होइन । राम्रा गुणहरुले सुशोभित केटो यदि पाइन्छ भने त उसित अथवा उसका घरका मानिसहरुसित आफ्नी पुत्रीको विवाहको कुरा गर्नु अनुचित होइन, बरु राम्रो तथा प्रिय कार्य हो । रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम तथा सहाबा किराम (رضوان الله عليهم أجمعين) को कालमा पनि यो नियम थियो ।

حِجَجٍ ۚ فَإِنْ أَتْمَمْتَ عَشْرًا فَمِنْ عِندِكَ ۖ وَمَا أُرِيدُ أَنْ أَشُقَّ عَلَيْكَ ۚ سَتَجِدُنِي إِن شَاءَ اللَّهُ مِنَ الصَّالِحِينَ ﴿٢٧﴾

आठ वर्षसम्म मेरो कामकाज गर्नुस् ।[1] हो, यदि तपाईं दश वर्षसम्म काम गर्नुहुन्छ भने यो तपाईंतिरबाट उपकार स्वरुप हुन्छ, म कदापि यो चाहन्न कि तपाईंमाथि कुनै प्रकारको कष्ट पारुँ ।[2] अल्लाहलाई स्वीकार भयो भने अगाडी गएर तपाईंले मलाई भला व्यक्ति पाउनुहुनेछ ।[3]

قَالَ ذَٰلِكَ بَيْنِي وَبَيْنَكَ ۖ أَيَّمَا الْأَجَلَيْنِ قَضَيْتُ فَلَا عُدْوَانَ عَلَيَّ ۖ وَاللَّهُ عَلَىٰ مَا نَقُولُ وَكِيلٌ ﴿٢٨﴾

(२८) (मूसा अलैहिस्सलामले) भने कि ठीक छ यो कुरा त मेरो तथा तपाईंको बीचमा निर्धारित भइहाल्यो, म यी दुवै अवधिहरुमध्ये जसलाई म पूरा गरिदिऊ, त ममाथि कुनै अत्याचार नहोस् ।[4] हामीले यो जे-जति गरिराखेछौं, त्यसमाथि अल्लाह (साक्षी एवं) कार्यक्षम छ ।[5]

فَلَمَّا قَضَىٰ مُوسَى الْأَجَلَ وَسَارَ

(२९) जब (आदरणीय) मूसा (अलैहिस्सलाम) ले अवधि पूरा गरिहाले तथा आफ्नो परिवारका सदस्यहरुलाई

[1]यसलाई धर्मगुरुहरुले पारिश्रमिक (मजदूरीमा काम गराउने) कुराको औचित्यको प्रमाण बनाएका छन् अर्थात् किराया तथा पारिश्रमिकमा पुरुष सेवा प्राप्त गर्न उचित छ ।

[2]अर्थात् दुई अतिरिक्त वर्षको सेवामा कठिनाई तथा कष्ट छ भने ८ वर्ष पश्चात जाने आज्ञा हुनेछ ।

[3]न झगडा गर्नेछु, न दुख दिनेछु, न कडाईसित काम लिनेछु ।

[4]अर्थात् आठ वर्ष पश्चात अथवा दश वर्ष पश्चात जान चाहन्छु भने मसित अधिक बस्ने माँग नगरियोस् ।

[5]यो केही विद्वानहरुका निकट शोएब अथवा शोएब अलैहिस्सलामको भतिजाको कथन हो तथा केहीका निकट आदरणीय मूसाको । सम्भव छ दुबैको तर्फबाट होस्, किनभने बहुवचन प्रयोग भएको छ अर्थात् दुवैले यस कुरामा अल्लाहलाई साक्षी ठहराए । तथा त्यसका साथै उनकी पुत्री तथा आदरणीय मूसामा वैवाहिक सम्बन्ध स्थापित भयो । शेष विवरणको वर्णन अल्लाह तआलाले गरेको छैन, त्यसो त इस्लाम धर्ममा दुबै पक्षहरुको सहमतिका साथ विवाह सम्बन्धका लागि दुई साक्षी पनि आवश्यक छ ।

[6]आदरणीय इब्ने अब्बास رضی اللہ عنہما ले यस अवधिबाट दश वर्षको अवधि तात्पर्य लिएका छन्, किनकि यही पूर्ण तथा शुद्ध (अर्थात् मूसाका ससुराका लागि प्रिय एवं इच्छित) थियो तथा आदरणीय मूसाको दया भावका कारण आफ्नो बृद्ध ससुराको

بِأَهْلِهِۦٓ ءَانَسَ مِن جَانِبِ ٱلطُّورِ نَارًا قَالَ لِأَهْلِهِ ٱمْكُثُوٓا۟ إِنِّىٓ ءَانَسْتُ نَارًا لَّعَلِّىٓ ءَاتِيكُم مِّنْهَا بِخَبَرٍ أَوْ جَذْوَةٍ مِّنَ ٱلنَّارِ لَعَلَّكُمْ تَصْطَلُونَ ﴿٢٩﴾

लिएर हिंडे[1] त 'तूर' नामक पर्वततिर अग्नि देखे, आफ्नो पत्नीसित भने, पर्ख ! मैले अग्नि देखेको छु अधिक सम्भव छ कि म त्यहाँबाट कुनै समाचार ल्याउँ अथवा अग्निको कुनै डल्लो ल्याउँ ताकि तिमी ताप ।

فَلَمَّآ أَتَىٰهَا نُودِىَ مِن شَٰطِئِ ٱلْوَادِ ٱلْأَيْمَنِ فِى ٱلْبُقْعَةِ ٱلْمُبَٰرَكَةِ مِنَ ٱلشَّجَرَةِ أَن يَٰمُوسَىٰٓ إِنِّىٓ أَنَا ٱللَّهُ رَبُّ ٱلْعَٰلَمِينَ ﴿٣٠﴾

(३०) अतः जब त्यहाँ पुगे त त्यस शुभ धर्तीको मैदानको दायाँ किनाराको वृक्षबाट आवाज दिइयो[2] कि हे मूसा ! निःसन्देह म नै अल्लाह हूँ सर्वलोकको प्रभु ।[3]

وَأَنْ أَلْقِ عَصَاكَ ۖ فَلَمَّا رَءَاهَا تَهْتَزُّ كَأَنَّهَا جَآنٌّ وَلَّىٰ مُدْبِرًا وَلَمْ يُعَقِّبْ ۚ يَٰمُوسَىٰٓ أَقْبِلْ وَلَا تَخَفْ ۖ إِنَّكَ مِنَ ٱلْءَامِنِينَ ﴿٣١﴾

(३१) तथा यो (पनि आवाज आयो) कि आफ्नो लठ्ठी बजार । अनि जब त्यसलाई देखे कि त्यो सर्प जस्तै चल्मलाई राखेको छ, त पिठ्यूँ फर्काइ भागे तथा पछाडी फर्केर पनि हेरेनन्, हामीले भन्यौं कि हे मूसा ! अगाडी आउ भयभीत नहोउ, निःसन्देह तिमी हरेक प्रकारले शन्ति प्राप्त (सुरक्षित) छौ ।[4]

हार्दिक इच्छाका विपरीत गर्न राम्रो ठानेनन् । (फ़तहुल बारी, किताबुल शहादत, वाबु मन उमेर बे इंजाजिल वअदे)

[1]यसवाट ज्ञात भयो कि श्रीमान् आफ्नी श्रीमतीलाई जहाँ चाहन्छ लैजान सक्छ ।

[2]अर्थात् आवाज घाटीको एक किनारबाट आइराखेको थियो, जुन पश्चिमतिर पर्वतको दाहिनेतर्फ थियो । यहाँ वृक्षबाट अग्निका ज्वाला उडिराखेका थिए जो वास्तवमा प्रभुको दिव्यज्योतिको प्रकाश थियो ।

[3]अर्थात् हे मूसा ! तिमीसित जो यस समय सम्बोधन एवं वार्ता गरिराखेको छ, त्यो म अल्लाह हूँ सर्वलोकको पालनहार ।

[4]यो मूसा अलैहिस्सलामको त्यो चमत्कार हो जो तूर पर्वतमा नबूअतबाट सुशोभित गरिए पश्चात उनलाई प्राप्त भयो । किनकि चमत्कार व्यवहारका प्रतिकूल मामिलालाई विपरीत होस् । यस्तो कुरा अल्लाहको आदेश तथा इच्छा अनुसार व्यक्त हुन्छ कुनै मनुष्यको शक्तिले होइन चाहे त्यो कुनै महान पैगम्बर

اُسْلُكْ يَدَكَ فِيْ جَيْبِكَ تَخْرُجْ بَيْضَآءَ مِنْ غَيْرِ سُوْٓءٍ وَّاضْمُمْ اِلَيْكَ جَنَاحَكَ مِنَ الرَّهْبِ فَذٰنِكَ بُرْهَانٰنِ مِنْ رَّبِّكَ اِلٰى فِرْعَوْنَ وَمَلَا۟ئِهٖ ؕ اِنَّهُمْ كَانُوْا قَوْمًا فٰسِقِيْنَ ﴿٣٢﴾

(३२) आफ्नो हातलाई आफ्नो खल्तीमा हाल त्यो कुनै प्रकारको दाग बिना पूर्णतः उज्जवल टल्किदै निस्कनेछ,[१] तथा भयबाट बच्नको लागि आफ्नो भुजा आफूतिर मिलाएर राख ।[२] यी दुबै चमत्कार तिम्रो प्रभुको तर्फबाट हुन् फिरऔन तथा त्यसका गुटतिर, वस्तुतः उनीहरु सबै अवहेलना गर्ने अवज्ञाकारीहरु हुन् ।[३]

قَالَ رَبِّ اِنِّيْ قَتَلْتُ مِنْهُمْ نَفْسًا فَاَخَافُ اَنْ يَّقْتُلُوْنِ ﴿٣٣﴾

(३३) (मूसा अलैहिस्सलामले) भने कि प्रभु ! मैले उनको एकजना मान्छेलाई मारिदिएको थिएँ। अब मलाई सम्भावना छ कि उनीहरु मलाई पनि मारिहाल्नेछन् ।[४]

तथा निकटवर्ती नबी किन नहोस् । यसकारण जब मूसाद्वारा आफ्नो लट्ठी धर्तीमा बजारे पश्चात चल्दै, दगुर्दै तथा फन्फनाउँदै सर्प बन्यो त आदरणीय मूसाको भय समाप्त भयो तथा यो स्पष्ट भयो कि अल्लाह तआलाले सत्यताको प्रमाण स्वरुप यो चमत्कार उनलाई प्रदान गरेको छ ।

[१]यो उज्जवल तथा प्रकाशित हाथ दोस्रो चमत्कार थियो जो उनलाई प्रदान गरियो ।

[२]लट्ठी विशाल सर्प बन्नाले जुन भय आदरणीय मूसालाई उत्पन्न हुन्थ्यो, त्यसको निवारण भनियो कि आफ्नो भुजा आफूतिर मिलाइहाल्ने गर अर्थात् आफ्नो काखीमा च्याप्ने गर, जसबाट भय जाने गर्छ। केही व्याख्याकारहरु भन्छन् कि यो सामान्य छ कि जहिले पनि कोहीसित कुनै भय प्रतीत हुन्छ भने यसप्रकार गर्नाले भय समाप्त हुनेछ । इमाम इब्ने कसीर भन्दछन् कि आदरणीय मूसाको अनुसरणमा जो कोही पनि घबराहटको समय आफ्नो हृदयमा हात राख्नेछ भने त्यसको हृदयबाट भय-त्रास लोप हुनेछ अथवा कमसेकम हल्का हुनेछ । إن شاء الله (यदि अल्लाहले चाहनु भयो भने)

[३]अर्थात् फिरऔन तथा त्यसको गुटका समक्ष यी दुबै चमत्कार आफ्नो सत्यता प्रमाणको रुपमा प्रस्तुत गर । यिनीहरु अल्लाहको आज्ञाकारिताबाट निस्किसकेका छन् तथा अल्लाहको धर्मका विरोधी हुन् ।

[४]यो त्यो भय थियो जो वास्तवमा आदरणीय मूसाको प्राणलाई थियो, किनकि उनको हातबाट एउटा किब्तीको हत्या भएको थियो ।

وَأَخِي هَٰرُونُ هُوَ أَفْصَحُ مِنِّي لِسَانًا فَأَرْسِلْهُ مَعِيَ رِدْءًا يُصَدِّقُنِيٓ إِنِّيٓ أَخَافُ أَن يُكَذِّبُونِ ﴿٣٤﴾

(३४) तथा मेरो भाइ हारुन म भन्दा अत्याधिक स्वच्छ भाषी छ, तिमी त्यसलाई पनि मेरो सहायक बनाएर मसँग पठाउ[1] कि मेरो पुष्टि गरोस्, मलाई त भय छ कि उनीहरुले मलाई झुठ्लाउनेछन् ।

قَالَ سَنَشُدُّ عَضُدَكَ بِأَخِيكَ وَنَجْعَلُ لَكُمَا سُلْطَٰنًا فَلَا يَصِلُونَ إِلَيْكُمَا ۚ بِـَٔايَٰتِنَآ ۚ أَنتُمَا وَمَنِ ٱتَّبَعَكُمَا ٱلْغَٰلِبُونَ ﴿٣٥﴾

(३५) (अल्लाह तआलाले) भन्यो कि हामी तिम्रो भाइद्वारा तिमीलाई बाहुबल प्रदान गर्नेछौं[2] तथा तिमी दुबैलाई प्रभावशाली गर्नेछौं त फ़िरऔनी तिमीसम्म पुग्न सक्ने छैन ।[3] हाम्रा निशानीहरुका कारक, तिमी दुबै तथा तिम्रा अनुयायी नै विजयी रहनेछन् ।[4]

فَلَمَّا جَآءَهُم مُّوسَىٰ بِـَٔايَٰتِنَا بَيِّنَٰتٍ قَالُوا۟ مَا هَٰذَآ إِلَّا سِحْرٌ مُّفْتَرًى

(३६) अतः जब उनका पासमा मूसा (अलैहिस्सलाम) हामीबाट दिइएका खुल्ला चमत्कार लिएर पुगे त उनीहरुले भने कि यो त केवल

[1]इस्राईली कथाहरुका आधारमा मूसाको जिभ्रोमा भक्भकाउनुपना थियो, जसको कारण यो बताइयो कि आदरणीय मूसाका समक्ष अग्निका डल्ला तथा खजूर अथवा मोती राखिए त उहाँले अंगारा टिपेर आफ्नो मुखमा राखिहालेका थिए जसबाट उहाँको जिभ्रो डढेको थियो । यो कारण सही हो अथवा होइन । तैपनि कुरआन करीमका शब्दहरुबाट यो सिद्ध छ कि आदरणीय मूसाको जिभ्रोमा गाँठो थियो, जसलाई खोल्नको लागि प्रार्थना उनले नबूअतबाट अलंकृत भए पश्चात गर्नुभयो । رِدْءًا (रिद्अ) को अर्थ हो सहायक सहयोगी, तथा बल पुऱ्याउने मानिस अर्थात् हारुन आफ्नो स्पष्ट उच्चारणबाट मेरो सहायता गरी मलाई बल पुऱ्याउने छन् ।

[2]अर्थात् आदरणीय मूसाको प्रार्थना स्वीकार गरियो तथा उनको सिफारिशमा आदरणीय हारुनलाई पनि नबूअत प्रदान गरी उनका साथी तथा सहायक बनाइदियो ।

[3]अर्थात् हामीले तिम्रो रक्षा गर्नेछौं, फ़िरऔन तथा त्यसका चेलाहरु तिम्रो केही बिगार्न सक्ने छैनन् ।

[4]यो त्यही विषय जो कुरआन करीममा विभिन्न स्थानहरुमा वर्णित छ, जस्तै सूरःअल-मायदा-६७, सूरः अल-अहज़ाब-३९, सूरः अल-मुजादिला-२१, सूरः अल मोमिन-५१ तथा ५२)

وَمَا سَمِعْنَا بِهَٰذَا فِي آبَائِنَا الْأَوَّلِينَ ﴿٣٦﴾

(मनगढन्त जादू हो हामीले आफ्ना पूर्वजहरुका कालमा कहिल्यै यो सुनेनौं ।[1]

وَقَالَ مُوسَىٰ رَبِّي أَعْلَمُ بِمَن جَاءَ بِالْهُدَىٰ مِنْ عِندِهِ وَمَن تَكُونُ لَهُ عَاقِبَةُ الدَّارِ ۖ إِنَّهُ لَا يُفْلِحُ الظَّالِمُونَ ﴿٣٧﴾

(३७) तथा (आदरणीय) मूसाले भने मेरो प्रभु त्यसलाई राम्ररी जान्दछ जो त्यस कहाँबाट प्रकाश लिएर आउँछ[2] तथा जसका लागि आखिरतको उत्तम परिणाम हुन्छ ।[3] निःसन्देह अन्यायीहरुको भलो हुनेछैन ।[4]

---

[1]अर्थात यो आमन्त्रण कि सृष्टिमा केवल एउटै अल्लाह यस योग्य छ कि त्यसको उपासना गरियोस्, हाम्रा लागि बिल्कुलै नयाँ छ । यो त हामीले सुनेका छौं तथा न हाम्रा पूर्वज यस एकेश्वरवादसित परिचित थिए । मक्काका मूर्तिपूजकहरुले पनि नबी सल्लल्लाहु अलैहि वसल्लमका विषयमा भनेका थिए ।

﴿أَجَعَلَ الْآلِهَةَ إِلَٰهًا وَاحِدًا ۖ إِنَّ هَٰذَا لَشَيْءٌ عُجَابٌ﴾

"त्यसले त सारा पूज्यहरुलाई (समाप्त गरी) एउटै पूज्य बनाइदिएको छ । यो त बडो विचित्र कुरो छ ।" (सूरः स्वाद-५)

[2]अर्थात् म भन्दा तथा तिमीभन्दा अधिक सन्मार्ग जान्ने अल्लाह हो यसकारण जुन कुरा अल्लाहको तर्फबाट आउनेछ, त्यो उचित हुनेछ अथवा तिम्रा तथा तिम्रा पूर्वजहरुको ?

[3]उत्तम परिणामसित तात्पर्य आखिरतमा अल्लाहको प्रसन्नता तथा त्यसको क्षमा एवं दयाको पात्र घोषित हुनु हो, तथा यो सौभाग्य केवल एकेश्वरवादीहरुको भाग्यमा आउनेछ ।

[4]अत्याचारीसित तात्पर्य मिश्रणवादी तथा काफिर हुन् किनकि अत्याचारको अर्थ हो وَضْعُ الشَّيْءِ فِي غَيْرِ مَحَلِّهِ कुनै वस्तुलाई त्यसको मूल स्थानबाट स्थानान्तरित गरी कुनै अन्य स्थानमा राखिदिनु । मूर्तिपूजक पनि उपासनाको स्थानमा यस्ता व्यक्तिहरुलाई बसालिदिन्छन् जो त्यसका योग्य हुँदैनन् । यसैप्रकार काफिर पनि प्रभुको मूल स्थानसित अनभिज्ञ रहन्छन् । यसकारण यिनीहरु अत्याधिक अत्याचारी हुन् तथा यिनीहरु सफलताबाट अर्थात् आखिरतमा अल्लाहको दया तथा क्षमाबाट बञ्चित रहनेछन् । यस आयतबाट यो पनि ज्ञात भयो कि वास्तविक सफलता आखिरतको सफलता हो । संसारमा सुख तथा धन एवं साधनको बाहुल्य वास्तविक सफलता होइन यसकारण कि यो अस्थायी सफलता नास्तिक एवं मिश्रणवादीलाई पनि संसारमा प्राप्त हुन्छ । किन्तु अल्लाह उनीबाट सफलतालाई नकारिराखेको छ जसको स्पष्ट अर्थ यो हो कि वास्तविक सफलता आखिरत (परलोक) कै सफलता हो न कि संसारका केही दिनहरुका लागि अस्थायी सुख-समृद्धिको बाहुल्य ।

(३८) तथा फ़िरऔंनले भन्यो कि हे दरबारियाहरु! म त आफू अतिरिक्त कसैलाई तिम्रो देवता जान्दिन । सुन, हे हामान! तिमी मेरो लागि माटोलाई आगोमा पकाउन लग[1] अनि मेरो लागि एउटा महल निर्मित गर त म मूसाको पूज्य (देवता) लाई हेर्न सकूँ,[2] त्यसलाई म त मिथ्यावादीहरुमध्ये नै ठानिराखेको छु ।[3]

وَقَالَ فِرْعَوْنُ يَٰٓأَيُّهَا ٱلْمَلَأُ مَا عَلِمْتُ لَكُم مِّنْ إِلَٰهٍ غَيْرِى فَأَوْقِدْ لِى يَٰهَٰمَٰنُ عَلَى ٱلطِّينِ فَٱجْعَل لِّى صَرْحًا لَّعَلِّىٓ أَطَّلِعُ إِلَىٰٓ إِلَٰهِ مُوسَىٰ وَإِنِّى لَأَظُنُّهُۥ مِنَ ٱلْكَٰذِبِينَ ﴿٣٨﴾

(३९) उसले तथा उसको सेनाले अनुचित रुपमा देशमा घमण्ड गऱ्यो[4] तथा ठान्यो कि हामीतिर फर्काइने नै छैन ।

وَٱسْتَكْبَرَ هُوَ وَجُنُودُهُۥ فِى ٱلْأَرْضِ بِغَيْرِ ٱلْحَقِّ وَظَنُّوٓا۟ أَنَّهُمْ إِلَيْنَا لَا يُرْجَعُونَ ﴿٣٩﴾

(४०) अन्तमा हामीले उसलाई तथा उसको सेनालाई समात्यौं तथा समुद्रमा डुबाइदियौं,[5] अब हेरिहाल कि ती पापीहरुको अन्त कस्तो भयो ?

فَأَخَذْنَٰهُ وَجُنُودَهُۥ فَنَبَذْنَٰهُمْ فِى ٱلْيَمِّ فَٱنظُرْ كَيْفَ كَانَ عَٰقِبَةُ ٱلظَّٰلِمِينَ ﴿٤٠﴾

---

[1] अर्थात् माटोलाई अग्निमा पोलेर ईंटाहरु बने । हामान, फ़िरऔनको मन्त्री तथा परामर्शदाता एवं त्यसको शासनको प्रवन्धक थिए ।

[2] अर्थात् एउटा अग्लो अथवा सुदृढ भवन निर्मित गर, जसमा चढेर म आकाशमा यो हेर्न सकूँ कि त्यहाँ म बाहेक कोही अन्य प्रभु छ ?

[3] अर्थात् मूसा (अलैहिस्सलाम) जो दावा गर्छ कि आकाशहरुमा प्रभु छ जो अखिल जगतको पालनकर्ता हो, म त त्यसलाई झुठा ठान्दछु ।

[4] धर्तीसित तात्पर्य मिश्रको धर्ती हो जहाँ फ़िरऔनले राज्य गर्दथे तथा अहङ्कारको अर्थ विना अधिकार आफूलाई उच्च ठान्नु । अर्थात उनको पासमा कुनै प्रमाण यस्तो थिएन जो मूसाका प्रमाण एवं चमत्कारहरुको खण्डन गर्नसक्छ परन्तु अहंकार बरु शत्रुताको प्रदर्शन गर्दै उनले हठधर्मी एवं इन्कारको मार्ग अपनाए ।

[5] अर्थात् जब उनको कुफ्र तथा अहङ्कार असीम भइहाल्यो तथा उनी कुनै प्रकारले पनि ईमान स्वीकार्नका लागि तयार भएनन् त अन्तमा एकदिन प्रात:काल हामीले उनीहरुलाई नदीमा डुबाइदियौं । (यसको विवरण सूर: अल-शुअरामा गुज्रिसकेको छ)

وَجَعَلْنَٰهُمْ أَئِمَّةً يَدْعُونَ إِلَى ٱلنَّارِ ۖ وَيَوْمَ ٱلْقِيَٰمَةِ لَا يُنصَرُونَ ﴿٤١﴾

(४१) तथा हामीले उनीहरुलाई त्यस्ता अगुवा बनाइदियौं कि मानिसहरुलाई नर्कतिर बोलाउन्[1] तथा केयामतका दिन कदापि सहायता नगरियून् ।

وَأَتْبَعْنَٰهُمْ فِى هَٰذِهِ ٱلدُّنْيَا لَعْنَةً ۖ وَيَوْمَ ٱلْقِيَٰمَةِ هُم مِّنَ ٱلْمَقْبُوحِينَ ﴿٤٢﴾

(४२) तथा हामीले यस संसारमा पनि उनका पछाडी आफ्ना धिक्कार लगाइदियौं, तथा केयामतका दिन पनि नराम्रो दुर्दशा उनीहरुमध्येबाट हुनेछन् ।[2]

وَلَقَدْ ءَاتَيْنَا مُوسَى ٱلْكِتَٰبَ مِنۢ بَعْدِ مَآ أَهْلَكْنَا ٱلْقُرُونَ ٱلْأُولَىٰ بَصَآئِرَ لِلنَّاسِ وَهُدًى وَرَحْمَةً لَّعَلَّهُمْ يَتَذَكَّرُونَ ﴿٤٣﴾

(४३) तथा ती पूर्वकालीन मानिसहरुलाई विध्वस्त गरे पश्चात हामीले मूसालाई यस्तो किताब प्रदान गर्‍यौं[3] जो मानिसहरुका लागि प्रमाण तथा प्रकाश एवं कृपा भएर आएको थियो[4] ताकि उनीहरु हिंडे शिक्षा ग्रहण गरुन् ।[5]

وَمَا كُنتَ بِجَانِبِ ٱلْغَرْبِىِّ إِذْ قَضَيْنَآ إِلَىٰ مُوسَى ٱلْأَمْرَ وَمَا كُنتَ مِنَ ٱلشَّٰهِدِينَ ﴿٤٤﴾

(४४) तथा तूरको पश्चिमी दिशातिर जबकि हामीले मूसालाई आदेशको प्रकाशना (वह्य) पुर्‍याएका थियौं, न त तिमी उपस्थित थियौ न तिमी दर्शकहरुमध्ये थियौ ।[6]

[1]अर्थात् जो पनि उनका पश्चात त्यस्ता मानिसहरु हुनेछन् जो अल्लाह एक हुने कुरो अथवा त्यसको अस्तित्वलाई अस्वीकार गर्नेछन् त उनका प्रमुख तथा अगुवा फ़िरऔन नै ठान्नेछन्, जो नरकतिर आमन्त्रित गर्नेछन् ।

[2]अर्थात् संसारमा पनि अपमान एवं अनादर उनको भाग्य बन्यो तथा आख़िरतमा पनि दुर्दशा हुनेछन् अर्थात मुख कालो तथा आँखा पहेंलो । जस्तो कि नरकवासीहरुको वर्णनमा पर्दछ ।

[3]अर्थात् फ़िरऔन तथा त्यसका सम्प्रदाय अथवा नूहका समुदाय तथा आद एवं समूदका समुदाय आदिका विनाश पश्चात मूसालाई किताब (तौरात) प्रदान गरियो ।

[4]जसवाट उनीहरु सत्यलाई पहिचान गर्न सकून् तथा त्यसलाई अपनाउन् तथा अल्लाहको कृपाका पात्र वनून् ।

[5]अर्थात् अल्लाहका उपकारहरुको कृतज्ञता व्यक्त गरुन् तथा अल्लाहमाथि ईमान कायम गरून् तथा पैग़म्बरहरुको अनुसरण गरुन्, जो उनीहरुलाई भलाई, सन्मार्ग एवं वास्तविक सफलतातिर आमन्त्रित गर्दछन् ।

[6]अर्थात् तूर पर्वतमा जब हामीले मूसासित वार्तालाप गर्‍यौं तथा उसलाई प्रकाशना एवं रिसालतबाट अलंकृत गर्‍यौं, हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम), तिमी न त्यहाँ उपस्थित

وَلَٰكِنَّآ أَنشَأۡنَا قُرُونٗا فَتَطَاوَلَ عَلَيۡهِمُ ٱلۡعُمُرُۚ وَمَا كُنتَ ثَاوِيٗا فِيٓ أَهۡلِ مَدۡيَنَ تَتۡلُواْ عَلَيۡهِمۡ ءَايَٰتِنَا وَلَٰكِنَّا كُنَّا مُرۡسِلِينَ ۝٤٥

(४५) परन्तु हामीले धेरै वंशहरुलाई सृष्टि गऱ्यौं[१] जसमाथि लामो अवधि व्यतीत भयो[२] तथा न तिमी मदयनका निवासी थियौ[३] कि उनका समक्ष हाम्रा आयतहरुका पाठ गर्दथ्यौ, बरु हामी नै रसूलहरुलाई पठाउने रहेका छौं ।[४]

وَمَا كُنتَ بِجَانِبِ ٱلطُّورِ إِذۡ نَادَيۡنَا وَلَٰكِن رَّحۡمَةٗ مِّن رَّبِّكَ لِتُنذِرَ

(४६) तथा न तिमी तूरतिर थियौ जबकि हामीले आवाज दियौं[५] बरु यो तिम्रो प्रभुतिर बाट एउटा कृपा हो,[६] यसकारण कि तिमी उनीहरुलाई

थियौ तथा न यस दृश्यका दर्शकहरुमध्ये थियौ । बरु यी परोक्षका कुराहरु हुन् जसलाई हामीले प्रकाशनाद्वारा तिमीलाई भनिराखेका छौं, जो यस कुराको प्रमाण हो कि तिमी अल्लाहका सच्चा पैगम्बर हौ, किनकि न त यी कुराहरु तिमीले कसैबाट सिकेका छौ तथा न स्वयं नै उनका दर्शन नै गरेका छौ । यो विषय अन्य स्थानहरुमा पनि वर्णित छ, जस्तै सूर: आले इमरान-४४, सूर: हूद-४९ तथा १००, सूर: यूसुफ १०२ सूर: ताहा-९९ आदि आयतहरु ।

[१] قُرُونٌ (कुरून) बहुवचन हो قَرْنٌ (कर्न) को, जसको अर्थ हो युग । परन्तु यहाँ सम्प्रदायहरुको अर्थमा छ, अर्थात हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) ! तपाईं र मूसाकामध्ये जो कालान्तर छ त्यसमा हामीले कैयन् सम्प्रदाय पैदा गरेका छौं ।

[२]अर्थात् समयको परिवर्तनले धर्म-विधान तथा धर्मादेश पनि परिवर्तित भए तथा मानिसहरु पनि धर्मलाई बिर्सिए, जसका कारण उनीहरुले अल्लाहका आदेशहरुलाई पछाडी पारिदिए तथा त्यसका वचनलाई बिर्सिहाले तथा यसप्रकार यसको आवश्यकता उत्पन्न भयो कि एक नयाँ नबीलाई अवतरित गरियोस् अथवा यो अर्थ हो कि लामो अवधिका कारण अरबका मानिसहरु नबूअत तथा रिसालतलाई बिल्कुलै बिर्सिहाले, त्यसकारण तपाईंको नबूअतमाथि उनीहरुलाई आश्चर्य भैराखेको छ तथा त्यसलाई स्वीकार गर्न तयार छैनन् ।

[३]जसबाट तपाईं स्वयं यस घटनाका विवरणसित परिचित हुनुहुन्थ्यो ।

[४]तथा यसै नियम अनुसार हामीले तपाईंलाई रसूल बनाएर पठाएका छौं तथा पछिल्ला घटना एवं कथाहरुसित तपाईंलाई परिचित गराइराखेका छौं ।

[५]अर्थात् यदि तपाईं सच्चा रसूल नभएको भए त मूसाको यस घटनाको ज्ञान पनि तपाईंलाई हुँदैनथ्यो ।

[६]अर्थात् तपाईंको यो ज्ञान, अवलोकन तथा दर्शनको परिणाम होइन बरु तपाईंको प्रभुको कृपा हो कि त्यसले तपाईंलाई नबी बनायो तथा प्रकाशनाबाट अलंकृत गऱ्यो ।

قَوْمًا مَّآ أَتٰىهُم مِّن نَّذِيرٍ مِّن قَبْلِكَ لَعَلَّهُمْ يَتَذَكَّرُونَ ﴿٤٦﴾

सतर्क गर जसको पासमा तिमीभन्दा पूर्व कोही सचेतक पुगेन,[1] ताकि उनीहरुले शिक्षा ग्रहण गरून् ।

وَلَوْلَآ أَن تُصِيبَهُم مُّصِيبَةٌۢ بِمَا قَدَّمَتْ أَيْدِيهِمْ فَيَقُولُوا رَبَّنَا لَوْلَآ أَرْسَلْتَ إِلَيْنَا رَسُولًا فَنَتَّبِعَ ءَايٰتِكَ وَنَكُونَ مِنَ الْمُؤْمِنِينَ ﴿٤٧﴾

(४७) यदि यो कुरा नभए कि उनीहरुलाई उनका आफ्ना हातद्वारा अगाडी पठाइएका कर्महरुका कारण कुनै विपत्ति आइपुग्यो भने त यो भनिहाल्थे कि हे हाम्रा प्रभु ! तिमीले हामीतिर कुनै रसूल किन पठाएनौं ताकि हामी तिम्रा आयतको पालना गर्थ्यौं तथा ईमान भएकाहरुमध्ये हुन्थ्यौं ।[2]

فَلَمَّا جَآءَهُمُ الْحَقُّ مِنْ عِندِنَا قَالُوا

(४८) अनि जब उनको पास हाम्रो तर्फबाट सत्य आइपुग्यो, त भन्दछन् कि यो त्यो

[1]यसबाट तात्पर्य मक्कावासी तथा अरब हुन् जसतिर नबी सल्लल्लाहु अलैहि वसल्लम भन्दा पूर्व कोही नबी आएन, किनकि आदरणीय इब्राहीमका पश्चात नबूअतको क्रम इब्राहीमका परिवारमा नै रहयो तथा उनको अवतरण इस्राईलका सन्तानतिर नै हुँदैगर्‍यो । इस्माईलका सन्तान अर्थात अरबहरुमा नबी सल्लल्लाहु अलैहि वसल्लम प्रथम नबी थिए तथा नबूअतको क्रम पूरा गर्ने मानिस थिए । उनीतिर नबी (सन्देष्टा) पठाउनुको आवश्यकता यसकारण ठानिएन होला कि अन्य नबीहरुको सन्देश तथा उनको आमन्त्रण उनलाई पुग्दै रहेको होला । किनकि त्यसबिना उनका लागि कुफ्र तथा मिश्रणवादमा दृढ रहनका लागि उनीसित बहाना रहनेछ तथा यो बहाना अल्लाह तआलाले कसैको लागि शेष छोडेको छैन ।

[2]अर्थात् उनका यसै बहानालाई समाप्त गर्नका लागि हामीले तपाईंलाई उनीतिर नबी बनाएर पठाएका छौं । किनकि लामो अवधिका कारण भूतपूर्व नबीहरुका शिक्षामा परिवर्तन भइसकेको छ तथा उनको आमन्त्रण बिर्सिसकिएको छ, तथा यस्तै समयमा कुनै नयाँ नवीको आवश्यकता हुन्छ । यही कारण छ कि अल्लाह तआलाले अन्तिम पैग़म्बर परम आदरणीय मुहम्मद मुस्तफा सल्लल्लाहु अलैहि वसल्लमका शिक्षाहरु (टिप्पणी) लाई परिवर्तन हुनु एवं हेरफेरबाट सुरक्षित राखेको छ तथा यस्तो प्राकृतिक प्रबन्ध गरिदिएको छ कि जसबाट तपाईंको आमन्त्रण संसारका कुना काप्चामा पुगिसकेको छ तथा निरन्तर पुगिराखेको छ ताकि कुनै नयाँ नबीको आवश्यकता नै शेष नरहोस् । तथा जो व्यक्ति यस आवश्यकताको दावा गरेर नबूअत ढोङ्ग रच्दछ, त्यो झूठा तथा दज्जाल हो ।

لَوْلَآ أُوتِىَ مِثْلَ مَآ أُوتِىَ مُوسَىٰٓ ۚ أَوَلَمْ يَكْفُرُوا۟ بِمَآ أُوتِىَ مُوسَىٰ مِن قَبْلُ ۖ قَالُوا۟ سِحْرَانِ تَظَٰهَرَا وَقَالُوٓا۟ إِنَّا بِكُلٍّ كَٰفِرُونَ ﴿٤٨﴾

किन दिइएन जस्तो मूसालाई दिइएका थिए ।[1] त के मूसालाई त्यसभन्दा पूर्व जे दिइएको थियो त्यसबाट उनीहरुले कुफ्र (इन्कार) गरेका थिएनन् ?[2] उनीहरुले भने यी दुबै जादूगर हुन्, जो एक-अर्काका सहायक हुन् तथा हामी त ती सबैलाई अस्वीकार गर्नेहरु हौं ।[3]

قُلْ فَأْتُوا۟ بِكِتَٰبٍ مِّنْ عِندِ ٱللَّهِ هُوَ أَهْدَىٰ مِنْهُمَآ أَتَّبِعْهُ إِن كُنتُمْ صَٰدِقِينَ ﴿٤٩﴾

(४९) भनिदिनुस् कि यदि सच्चा हौ भने तिमी पनि अल्लाहको पासबाट कुनै यस्तो किताब ल्याउ जो यी दुबैभन्दा अधिक पथ-प्रदर्शन भएको होस्, म त्यसैको अनुसरण गर्नेछु ।[4]

فَإِن لَّمْ يَسْتَجِيبُوا۟ لَكَ فَٱعْلَمْ

(५०) अनि यदि यिनीहरु तिम्रो नमानून्[5] त तिमी विश्वास गर कि यिनीहरु मात्र आफ्ना इच्छाहरुका

[1]अर्थात् आदरणीय मूसा जस्ता चमत्कार, जस्तो लट्ठी सर्प बनिहाल्नु तथा हात चम्कनु आदि ।

[2]अर्थात् माँगका अनुसार चमत्कार देखाइए पनि के लाभ ? जसलाई ईमान कायम गर्नु छैन, त्यो हरेक प्रकारका निशानीहरु देखिहाले पश्चात पनि ईमानबाट बञ्चित नै रहनेछ । के मूसाका चमत्कारको पश्चात फ़िरऔन तथा त्यसका अनुयायी मुसलमान भइहालेका थिए, उनीहरुले कुफ्र गरेनन् ? अथवा يَكْفُرُوا को सर्वनाम मक्काका कुरैशका लागि प्रयोग भएको छ अर्थात के उनीहरुको मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको नबूअतभन्दा पूर्व मूसासित कुफ्र गरेनन् ?

[3]प्रथम भावार्थका आधारमा दुबैबाट तात्पर्य आदरणीय मूसा तथा हारुन हुनेछन् तथा سِحْرَانِ (दुई जादु) को अर्थ ساحِران (दुई जादूगर) हुनेछ । तथा द्वितीय भावार्थमा यसबाट कुरआन तथा तौरात तात्पर्य हुनेछन् अर्थात् दुबै जादू हुन्, जो एक-अर्काका सहायक हुन् तथा हामी सबैलाई अर्थात मूसा तथा मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई मान्नेवाला होइनौं । (फ़तहुल कदीर)

[4]अर्थात् यदि तिमी सबै यस दावामा सच्चा हौ कि कुरआन मजीद तथा तौरात दुबै जादू हुन् त तिमी अल्लाहको कुनै अन्य पुस्तक प्रस्तुत गर जो उनीहरुभन्दा अधिक मार्गदर्शक होऊन्, म त्यसको अनुसरण गर्नेछु किनकि म त मार्गदर्शनको इच्छुक तथा अनुयायी हूँ ।

[5]अर्थात् कुरआन तथा तौरातभन्दा अधिक मार्गदर्शन प्रदान गर्ने किताब प्रस्तुत गर्न सकेनन् तथा निःसन्देह गर्नसक्ने छैनन् ।

أَنَّمَا يَتَّبِعُونَ أَهْوَاءَهُمْ ۚ وَمَنْ أَضَلُّ مِمَّنِ اتَّبَعَ هَوَاهُ بِغَيْرِ هُدًى مِّنَ اللَّهِ ۚ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٥٠﴾

अनुसरण गर्दै आएका छन् तथा त्यसभन्दा अधिक पथभ्रष्ट को छ ? जो अल्लाहको मार्गदर्शनको बिना आफ्ना इच्छाहरुका पछि लागेको होस्,[१] निःसन्देह अल्लाह तआ़ला अत्याचारीहरुलाई मार्गदर्शन दिंदैन ।[२]

وَلَقَدْ وَصَّلْنَا لَهُمُ الْقَوْلَ لَعَلَّهُمْ يَتَذَكَّرُونَ ﴿٥١﴾

(५१) तथा हामीले मानिसहरुका लागि आफ्नो वाणी पठाउँदै गर्‍यौं[३] ताकि उनीहरु शिक्षा ग्रहण गरून् ।[४]

الَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ مِن قَبْلِهِ هُم بِهِ يُؤْمِنُونَ ﴿٥٢﴾

(५२) जसलाई हामीले यसभन्दा पूर्व किताब प्रदान गर्‍यौं उनीहरु त यसमाथि ईमान कायम राख्दछन् ।[५]

وَإِذَا يُتْلَىٰ عَلَيْهِمْ قَالُوا آمَنَّا بِهِ

(५३) तथा जब (त्यसका आयतहरु) उनका समक्ष पढिन्छन् त उनीहरु यो भनिदिन्छन् कि यो

[१]अर्थात् अल्लाहको तर्फबाट अवतरित मार्गदर्शनलाई छाडि इन्द्रियहरुको अनुकरण गर्नु सबभन्दा ठूलो विचलन हो तथा यस आधारमा मक्काका यी कुरैश सबभन्दा अधिक विचलित छन्, जो यसै कुराको कार्यान्वयन गरिराखेका छन् ।

[२]यसमा अल्लाहको त्यसै विधिको वर्णन छ, जो अत्याचारीहरुका लागि उसकहाँ निर्धारित छ कि उनीहरु मार्गदर्शन प्राप्त गर्नुबाट बञ्चित रहन्छन् । यसकारण कि नवीहरुलाई झुठ्लाउनु, अल्लाहका आयतहरुबाट विमुख हुनु तथा निरन्तर कुफ्र, द्वेष एवं अहंकार यस्ता अपराध हुन् कि जसबाट सत्यलाई स्वीकार गर्ने एवं प्रभावित हुने योग्यता समाप्त भइदिन्छ । त्यसका पश्चात मनुष्य अत्याचार, पाप, कुफ्र एवं शिर्कको अन्धकारमा नै भौंतारिन्छ, त्यसलाई ईमानको प्रकाश प्राप्त हुँदैन ।

[३]अर्थात् एक रसूलको पश्चात दोस्रो रसूल, एक किताबको पश्चात दोस्रो किताब हामीले पठाउँदै रहयौं तथा यसप्रकार निरन्तर हामी आफ्नो कुरा मानिसहरुसम्म पुऱ्याउँदै रहयौं।

[४]उद्देश्य यसबाट यो थियो कि मानिसहरु पछिल्ला मानिसहरुका परिणामबाट तर्सेर तथा हाम्रा कुराबाट शिक्षा ग्रहण गरेर ईमान स्थापित गरून् ।

[५]यसबाट तात्पर्य ती यहूदी हुन् जो मुसलमान भइसकेका थिए, जस्तै अब्दुल्लाह बिन सलाम आदि, अथवा ती इसाई हुन् जो इथोपियाबाट नबी सल्लल्लाहु अलैहि वसल्लमको सेवामा आएका थिए तथा उहाँको पवित्र मुखबाट कुरआन करीम सुनेर मुसलमान भएका थिए । (इब्ने कसीर)

إِنَّهُ الْحَقُّ مِن رَّبِّنَا إِنَّا كُنَّا مِن قَبْلِهِ مُسْلِمِينَ ﴿٥٣﴾

हाम्रो प्रभुको तर्फबाट सत्य हुने कुरोमा हाम्रो ईमान (विश्वास) छ, हामी त यसभन्दा पूर्व नै मुसलमान छौं ।[1]

أُولَٰئِكَ يُؤْتَوْنَ أَجْرَهُم مَّرَّتَيْنِ بِمَا صَبَرُوا وَيَدْرَءُونَ بِالْحَسَنَةِ السَّيِّئَةَ وَمِمَّا رَزَقْنَاهُمْ يُنفِقُونَ ﴿٥٤﴾

(५४) यिनीहरु आफूबाट गरिएको धैर्यको स्वरुप दुई-दुई गुना प्रतिफल प्रदान गरिनेछन् ।[2] यिनी पुण्यबाट पापलाई हटाइदिन्छन्[3] तथा हामीले जे यिनीहरुलाई दिएका छौं त्यस मध्येबाट दिइरहन्छन् ।

وَإِذَا سَمِعُوا اللَّغْوَ أَعْرَضُوا عَنْهُ وَقَالُوا لَنَا أَعْمَالُنَا وَلَكُمْ أَعْمَالُكُمْ

(५५) तथा जब व्यर्थ कुरा[4] कानमा पर्दछ त त्यसबाट अलग हुन्छन् तथा भन्दछन् कि हाम्रो कर्म हाम्रा लागि तथा तिम्रा कर्म

[1]यो त्यसै वास्तविकतातिर संकेत छ जसलाई कुरआन करीममा विभिन्न स्थानहरुमा वर्णित गरिएको छ कि प्रत्येक कालमा अल्लाहका पैग़म्बरहरुले जुन धर्मको प्रचार गरेका छन्, त्यो इस्लाम नै थियो तथा ती नबीहरुका आमन्त्रणमा ईमान कायम गर्नेहरु मुसलमान नै भनिन्थे । यहूदी अथवा इसाई आदिका पारिभाषिक शब्द मानिसहरुका आफूले रचेका कुरा हुन् जसका आविष्कार पछि भयो । यसै आधारमा नबी करीम सल्लल्लाहु अलैहि वसल्लममाथि ईमान कायम गर्ने अहले किताब (यहूद तथा इसाईहरु) ले भने कि हामी त पहिलेदेखि नै मुसलमान हुँदै आएका छौं अर्थात् पूर्वका नबीहरुका अनुयायी तथा उनीमाथि ईमान स्थापित गर्नेहरु हौं ।

[2]धैर्यसित तात्पर्य हरेक प्रकारका परिस्थितिहरुमा नबीहरु तथा अल्लाहका किताबमा ईमान तथा त्यसमा दृढताले स्थिर रहनु हो । प्रथम किताब आयो त त्यसमाथि, त्यसको पश्चात दोस्रोमाथि ईमान सुदृढ राख्यो । पहिला नबीमा ईमान कायम गरे, त्यसका पश्चात दोस्रो नबी आयो त त्यसमाथि ईमान स्थिर गरे । उनका लागि दुईगुना प्रतिफल छ हदीसमा पनि उनका यस महत्वको वर्णन गरिएको छ । नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो : “तीन व्यक्तिहरुका लागि दुईगुना पारिश्रमिक छ, उनीहरुमध्ये एउटा त्यो अहले किताब हो जो आफ्नो नबीमाथि ईमान (विश्वास राख्दछ तथा फेरि ममाथि ईमान स्थिर गऱ्यो........)” (सहीह बुख़ारी किताबुल इल्म, मुस्लिम किताबुल ईमान, बाब वजूबिल ईमान बेरिसालते नबीयेना)

[3]अर्थात् उपकारको उत्तर अपकारले दिंदैन बरु क्षमा गरिदिन्छन् तथा अन्देखीले काम लिन्छन् ।

[4]यहाँ लग़वसित तात्पर्य त्यो अपशब्द तथा धर्मसित उपहास हो जो मूर्तिपूजकहरुले गर्दथे ।

سَلٰمٌ عَلَيْكُمْ لَا نَبْتَغِي الْجٰهِلِيْنَ ۝

तिम्रा लागि, तिमीमाथि सलाम होस्,[1] हामी अशिक्षितहरुसित (अल्फिन) चाहँदैनौं ।

اِنَّكَ لَا تَهْدِيْ مَنْ اَحْبَبْتَ وَلٰكِنَّ اللّٰهَ يَهْدِيْ مَنْ يَّشَآءُ ۚ وَ هُوَ اَعْلَمُ بِالْمُهْتَدِيْنَ ۝

(५६) तपाईं जसलाई चाहे मार्गदर्शन दिन् सक्नुहुन्न, बरु अल्लाह तआला जसलाई चाहन्छ मार्गदर्शन प्रदान गर्दछ। मार्गदर्शन प्राप्त मानिसहरुसित त्यही राम्ररी परिचित छ ।[2]

وَقَالُوْٓا اِنْ نَّتَّبِعِ الْهُدٰى مَعَكَ نُتَخَطَّفْ مِنْ اَرْضِنَا ؕ اَوَلَمْ نُمَكِّنْ لَّهُمْ حَرَمًا اٰمِنًا يُّجْبٰٓى اِلَيْهِ ثَمَرٰتُ

(५७) तथा भन्नलागे कि यदि हामी तपाईंसँग भएर मार्गदर्शनका अनुपालक बन्यौं भने हामी आफ्ना देशबाट खोसिहालिनेछौं,[3] के हामीले उनीहरुलाई शान्त तथा सुरक्षित एवं शान्ति

---

[1]यो सलाम अभिवादन भएको सलाम होइन बरु पन्छिने सलाम हो अर्थात् हामी तिमी जस्ता अशिक्षित, असभ्य व्यक्तिहरुसित तर्क-वितर्क वार्तालाप गर्न तयार नै छैनौं जस्तो कि प्रचलित भनाई छ, “अशिक्षितहरुलाई टाढैबाट सलाम,” स्पष्ट छ सलामसित तात्पर्य सम्बोधनलाई पन्छ्याउनु नै हो ।

[2]यो आयत त्यस बखत अवतरित भयो जब नबी सल्लल्लाहु अलैहि वसल्लमका शुभचिन्तक तथा दुखमा साथ दिने काका अबू तालिबको मृत्युको समय आयो त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले प्रयत्न गर्नुभो कि काका आफ्नो मुखबाट एकपटक (लाइलाहा-इल्लल्ला) لا إله إلا الله भनिदेऊन् ताकि क़्यामतका दिन म अल्लाहसित उनको क्षमाका लागि सिफारिश गर्न सकूँ। तर त्यहाँ कुरैशका अन्य प्रमुखहरुको उपस्थितिका कारण अबू तालिब ईमान स्वीकार गर्नबाट बञ्चित रहे तथा कुफ्रको अवस्थामा उनको अन्त भयो। नबी सल्लल्लाहु अलैहि वसल्लमलाई यस कुराको अत्यन्त दुख थियो । त्यस समय अल्लाह तआलाले यो आयत अवतरित गरी नबी सल्लल्लाहु अलैहि वसल्लमलाई स्पष्ट गरे कि तपाईंको कार्य केवल तर्क गर्नु तथा सन्देश पुऱ्याउनु एवं मार्गदर्शन हो । परन्तु प्रकाशको मार्गमा हिंडाइदिनु, यो हाम्रो कार्य हो। मार्गदर्शन उसैलाई प्राप्त हुन्छ जसलाई हामी सन्मार्ग प्रदान गर्न चाहन्छौं न कि त्यो जसलाई तपाईं मार्गमा हेर्न प्रिय ठान्नुहुन्छ। (सहीह बुख़ारी तफ़सीर सूरः अल-कसस, मुस्लिम किताबुल ईमान, बाब अव्वलुल ईमान क़ौलो ला इलाहा इल्लल्ला)

[3]अर्थात् हामी जहाँ छौं त्यहाँ हामीलाई रहन दिइने छैनौ तथा हामीलाई दुखसित अथवा विरोधीहरुसित लडाईंको सामना गर्नुपर्नेछ। यो केही काफ़िरहरुले ईमान स्वीकार नगर्नुको कारण प्रस्तुत गरे, अल्लाहले उत्तर दियो ।

كُلِّ شَيْءٍ رِّزْقًا مِّن لَّدُنَّا وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٥٧﴾

भएको 'हरम' मा दिएनौं,[1] जहाँ हरेक प्रकारका फल तानिएर आउँछन् जो हाम्रो पासमा जीविकाका रुपमा छन् ?[2] तर उनीहरुमध्ये अधिकतर केही जान्दैनन् ।

وَكَمْ أَهْلَكْنَا مِن قَرْيَةٍ بَطِرَتْ مَعِيشَتَهَا ۖ فَتِلْكَ مَسَاكِنُهُمْ لَمْ تُسْكَن مِّن بَعْدِهِمْ إِلَّا قَلِيلًا ۖ وَكُنَّا نَحْنُ الْوَارِثِينَ ﴿٥٨﴾

(५८) तथा हामीले धेरैजसो ती वस्तीहरुलाई ध्वस्त गरिदियौं जो आफ्ना सुख-सुविधामा दम्भ गर्न थालेका थिए । यी हुन् यिनका निवास स्थान जो उनी पश्चात निकै नै कम आबाद गरिए ।[3] तथा हामी नै हौ अन्ततः सबै थोकका उत्तराधिकारी ।[4]

وَمَا كَانَ رَبُّكَ مُهْلِكَ الْقُرَىٰ حَتَّىٰ يَبْعَثَ فِي أُمِّهَا رَسُولًا يَتْلُو عَلَيْهِمْ آيَاتِنَا ۚ وَمَا كُنَّا مُهْلِكِي

(५९) तथा तिम्रो प्रभु कुनै एक वस्तीलाई पनि त्यस समयसम्म ध्वस्त गर्दैन, जबसम्मकि उनको कुनै ठूलो वस्तीमा कुनै पैगम्बर पठाउँदैन जो हाम्रा आयतहरु

---

[1]अर्थात् यिनको यो तर्क अनुचित छ, यसकारण कि अल्लाह तआलाले त्यस नगरलाई जसमा रहन्छन्, शान्ति भएको बनाएको छ । जब यो नगर उनका कुफ्र तथा शिर्कको अवस्थामा शान्तिको स्थान थियो त के इस्लाम धर्म धारण गरिहाले पश्चात उनका लागि शान्ति स्थान रहनेछैन ?

[2]यो मक्का नगरको त्यो विशेषता हो जसका प्रत्येक वर्ष लाखौं हाजी तथा उमरह गर्नेहरु प्रत्यक्ष दर्शन गर्छन् कि मक्का नगरमा पैदावार नहुनुका उपरान्त अत्याधिक मात्रामा हरेक प्रकारका फल बरु संसारभरिका सामान सुलभ हुन्छन् ।

[3]यहाँ मक्कावासीहरुलाई तर्साइराखिएको छ कि तिमीले देखेनौ कि अल्लाहका उपकारबाट लाभान्वित भई अल्लाहको कृतज्ञता तथा अवहेलना गर्नेहरुको परिणाम के भयो ? आज उनको अधिकतर आबादी भग्नावशेषको रुपमा छ अथवा केवल इतिहासका पानाहरुमा नाम शेष रहेको छ । तथा अब आवत-जावत गर्ने यात्री नै केही क्षणका लागि विश्राम गर्छन्, उनी दुर्भाग्य तथा अशुभ हुनका कारण कोही पनि उनमा स्थाईरुपले बस्न प्रिय ठान्दैन ।

[4]अर्थात् उनीहरुमध्ये त कोही पनि शेष रहेन जो उनका घरहरु, धन तथा धर्तीको उत्तराधिकारी हुन्थे ।

الْقُرَىٰٓ إِلَّا وَأَهْلُهَا ظَٰلِمُونَ ﴿٥٩﴾

पढेर सुनाइदेओस्,[1] तथा हामी वस्तीहरुलाई त्यस समय ध्वस्त गर्दछौं जबकि त्यहाँ वास गर्नेहरु अत्याचार एवं क्रुरतामा कटिबद्ध होऊन् ।[2]

وَمَآ أُوتِيتُم مِّن شَىْءٍ فَمَتَٰعُ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا وَزِينَتُهَا ۚ وَمَا عِندَ ٱللَّهِ خَيْرٌ وَأَبْقَىٰٓ ۚ أَفَلَا تَعْقِلُونَ ﴿٦٠﴾

(६०) तथा तिमीलाई जे-जति दिइएको छ, त्यो केवल सांसारिक जीवनको समान हो तथा त्यसको शोभा हो, हो, अल्लाहसित जे छ, त्यो सर्वश्रेष्ठ तथा स्थाई छ । के तिमी बुझ्दैनौं ?[3]

أَفَمَن وَعَدْنَٰهُ وَعْدًا حَسَنًا فَهُوَ لَٰقِيهِ كَمَن مَّتَّعْنَٰهُ مَتَٰعَ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا ثُمَّ هُوَ يَوْمَ ٱلْقِيَٰمَةِ مِنَ ٱلْمُحْضَرِينَ ﴿٦١﴾

(६१) के त्यो व्यक्ति जसलाई हामीले पुण्य वचन दिएका छौं जसलाई त्यसले निश्चित रुपले पाउनेछ, त्यस व्यक्तिका समान हुनसक्छ, जसलाई हामीले सांसारिक जीवनका केही सुख-सामग्री प्रदान गरेका छौं, पुनः अन्तमा त्यो केयामतका दिन (समाति बाँधिएको) उपस्थित गरिनेछ ?[4]

---

[1]अर्थात् तर्कहरुलाई पूर्ण गरिए बिना कसैलाई विनाश गर्दैन । أُمِّها (ठूलो वस्ती) शब्दबाट यो पनि ज्ञात हुन्छ कि प्रत्येक साना-ठूला क्षेत्रमा नबी आएनन्, बरु केन्द्रिय स्थानहरुमा नबी आउँदैरहे तथा साना क्षेत्र उनका अधीन आइहाल्थे ।

[2]अर्थात् नबी पठाए पश्चात ती वस्तीका मानिस ईमान ल्याउँदैनथे तथा कुफ्र एवं शिर्कमा दृढ रहन्थे त उनीहरुलाई ध्वस्त गरिन्थ्यो । यही विषय सूर: हूद-११७ मा पनि वर्णित गरिएको छ ।

[3]अर्थात् के यस वास्तविकताबाट पनि तिमी अनभिज्ञ छौ कि यो धर्ती तथा यसको शोभा अस्थाई पनि छ तथा तुच्छ पनि, जबकि अल्लाह तआलाले ईमानवालाहरुका आफूसित जो उपहार तथा सुख-सुविधाहरु उपलब्ध गरेको छ, ती स्थायी पनि छन् तथा उत्तम पनि । हदीसमा छ, "अल्लाहको सौगन्ध, आख़िरत (परलोक) को अपेक्षा त्यस्तो छ जस्तै तिमीमध्ये कुनै व्यक्ति आफ्ना औंला समुद्रमा चोपि निकालोस्, अनि हेरोस् कि समुद्रको तुलनामा उसको औंलामा कति पानी हुनेछ ।" (सहीह मुस्लिम किताबुल जन्नते, बाबु फ़नाईद दुनियाँ व बयानिल हश्र)

[4]अर्थात् दण्ड तथा यातनाको अधिकारी हुनेछ । तात्पर्य यो हो कि ईमान भएकाहरु अल्लाहका वचन अनुसार वरदानहरुबाट लाभान्वित तथा अवज्ञाकारी यातना ग्रस्त हुनेछन् । के यी दुबैं समान हुनसक्छन् ?

وَيَوْمَ يُنَادِيهِمْ فَيَقُولُ أَيْنَ شُرَكَآءِيَ الَّذِينَ كُنتُمْ تَزْعُمُونَ ﴿٦٢﴾

(६२) तथा जुन दिन अल्लाह (तआला) ले उनीहरुलाई पुकारेर भन्नेछ कि तिमीले जसलाई आफ्ना विचारमा मेरा साझेदार ठहराएका थियौ, कहाँ छन् ?[1]

قَالَ الَّذِينَ حَقَّ عَلَيْهِمُ الْقَوْلُ رَبَّنَا هَٰٓؤُلَآءِ الَّذِينَ أَغْوَيْنَآ أَغْوَيْنَٰهُمْ كَمَا غَوَيْنَا تَبَرَّأْنَآ إِلَيْكَ مَا كَانُوٓا إِيَّانَا يَعْبُدُونَ ﴿٦٣﴾

(६३) जसमाथि पूरा भइसकेको हुनेछ उनीहरुले भन्नेछन्[2] हे हाम्रा प्रभु ! यिनै तिनीहरु हुन् जसलाई हामीले बहकाएर राखेका थियौं,[3] हामीले उनीहरुलाई यसैप्रकार विचलित त गऱ्यौं जुनप्रकार हामी विचलित थियौं,[4] हामी तिम्रो सेवामा आफूलाई यिनीहरुबाट अलगग गर्दछौं,[5] यी हाम्रा पूजा गर्दैनथे ।[6]

[1]अर्थात् ती देवी-देवता (मूर्तिहरु) अथवा व्यक्ति, जसलाई तिमीले संसारमा मेरो पूजामा सम्मिलित गर्दथ्यौ, उनीहरुलाई सहायताका लागि पुकार्दथ्यौ तथा उनका नामका भोग-प्रसाद चढाउँथ्यौ, आज कहाँ छन् ? के उनीहरु तिम्रो सहायता गर्न सक्छन् तथा मेरो यातनाबाट बचाउन सक्दछन् ? यो निन्दित गर्न तथा झपार्नका लागि अल्लाह तआलाले उनीसित भन्नेछ, अन्यथा त्यहाँ कसको शक्ति हुनेछ कि अल्लाहका समक्ष मुख खोलोस् ? यही विषय अल्लाह तआलाले सूरः अल-अनआम आयत ९४ तथा अन्य धेरैजसो स्थानहरुमा वर्णन गरेको छ ।

[2]अर्थात् यो अल्लाहको यातनाका अधिकारी घोषित भइसकेका छन्, जस्तै ठूला-ठूला शैतान (राक्षस) तथा कुफ्र र शिर्कका प्रचारक, उनीहरुले भन्नेछन् ।

[3]यो ती अशिक्षित जनसमूहतिर संकेत छ जसलाई कुफ्र तथा पथभ्रष्टताका प्रचारक तथा शैतानहरुले विचलित गरिदिएका थिए ।

[4]अर्थात् हामी त विचलित थियौं तथा यिनलाई पनि आफ्नो साथमा पथभ्रष्ट गरेका थियौं । अर्थ यो हो कि हामीले उनीमाथि कुनै दबाब दिएका थिएनौं, बस हाम्रो अलिकति संकेतमा हामीजस्तै उनीहरुले पनि पथ-भ्रष्टताको मार्ग अपनाए ।

[5]अर्थात् हामी उनीसित दुखी अलग छौं, हाम्रो उनीसित कुनै सम्बन्ध छैन । अर्थ यो हो कि सेवक तथा स्वामी, गुरु तथा शिष्य एक-अर्काका शत्रु हुनेछन् ।

[6]बरु वास्तवमा उनीहरुले आफ्ना इच्छाहरुको अनुकरण गर्दथे । अर्थात् ती देवता जसलाई मानिसहरु यो संसारमा पूजा गर्दथे, यस कुराबाट नै इन्कार गरिदिनेछन् कि मानिसहरु उनको पूजा गर्दथे । यस विषयलाई कुरआन करीममा विभिन्न स्थानहरुमा वर्णित गरिएको छ, जस्तै सूरः अल-अनआम-४९, सूरः मरियम-८१ तथा ८२, सूरः अल-अहकाफ-५ तथा ६ अल-अनकबूत-२५, अल-बक़र-१६६ तथा १६७ आदि यसैप्रकारका आयतहरु ।

وَقِيلَ ادْعُوا شُرَكَاءَكُمْ فَدَعَوْهُمْ فَلَمْ يَسْتَجِيبُوا لَهُمْ وَرَأَوُا الْعَذَابَ ۚ لَوْ أَنَّهُمْ كَانُوا يَهْتَدُونَ ﴿٦٤﴾

(६४) तथा भनिनेछ कि आफ्ना साभ्छेदारहरुलाई बोलाउ[1] त उनीहरुले बोलाउनेछन् परन्तु तिनीहरुले उनीहरुलाई उत्तरसम्म दिने छैनन् तथा सबै यातना देख्नेछन्,[2] काश यिनीहरुलाई मार्गदर्शन प्राप्त भएको भए ।[3]

وَيَوْمَ يُنَادِيهِمْ فَيَقُولُ مَاذَا أَجَبْتُمُ الْمُرْسَلِينَ ﴿٦٥﴾

(६५) तथा त्यस दिन उनीहरुलाई बोलाएर सोधिनेछ कि तिनीहरुले नबीहरुलाई के उत्तर दिएका थियौ ?[4]

فَعَمِيَتْ عَلَيْهِمُ الْأَنبَاءُ يَوْمَئِذٍ فَهُمْ لَا يَتَسَاءَلُونَ ﴿٦٦﴾

(६६) अनि त त्यस दिन सारा समाचार अन्धा भइहाल्नेछन् तथा एक-अर्कासित प्रश्नसम्म गर्नेछैन ।[5]

[1]अर्थात् उनीहरुसित सहायता माँग जुनप्रकार संसारमा माँग्थ्यौ । के उनीहरु तिम्रो सहायता गर्दछन् ? त उनीहरु पुकार्नेछन् । परन्तु त्यहाँ कसमा साहस हुनेछ कि जो यो भनोस् कि हो हामी तिम्रो सहायता गर्दछौं ?

[2]अर्थात् विश्वास गर्नेछन् कि हामी सबै नरकको इन्धन बन्नेछौं ।

[3]अर्थात् यातना देखिहाले पश्चात कामना गर्नेछन् कि काश संसारमा प्रकाशको मार्ग अपनाइहालेको भए त आज उनीहरु यस परिणामबाट जोगिने थिए । सूरः अल-कहफ-५२ तथा ५३ मा पनि यस विषयको वर्णन छ ।

[4]यसभन्दा पूर्वका आयतहरु (मन्त्रहरु) मा एकेश्वरवादसित सम्बन्धित प्रश्न थियो । यो दोस्रो घोषणा रिसालतको विषयमा छ अर्थात् तिमीतिर हामीले रसूल पठाएका थियौं, तिमीले उनीसित के व्यवहार गर्‍यौ, उनका आमन्त्रण स्वीकार गरेका थियौ ? जुनप्रकार चिहान (कब्र) मा प्रश्न हुन्छ कि तिम्रो पैगम्बर को हो तथा तिम्रो धर्म कुन चाहिं हो ? ईमान भएकाहरु त ठीक उत्तर दिइदिन्छन् परन्तु काफिर भन्दछ هَاه هَاه لا أدري (हाय ! मलाई त केही ज्ञात छैन) । त्यसैप्रकार केयामतका दिन पनि उनीहरुलाई यस प्रश्नको उत्तर समभ्कमा आउने छैन । त्यसैकारण अगाडी भन्यो उनीमाथि सारा सूचनाहरु अन्धा हुनेछन् अर्थात् कुनै तर्क उनको बुद्धिमा आउने छैन जसलाई उनीहरुले प्रस्तुत गर्न सकून् । यहाँ तर्कहरुलाई सूचनाहरुसित तुलना गरेर यस कुरोतिर संकेत गरिएको छ कि उनका भूठा विश्वासका लागि वास्तवमा उनका पासमा कुनै छँदैछैन, केवल कथा तथा उखानहरु छन् । जस्तै आज पनि कब्र पूजारीहरुसित मनगढन्त चमत्कारहरुका कथाका अतिरिक्त केही पनि छैन ।

[5]किनकि उनीहरुलाई विश्वास भइसकेको हुनेछ कि सबै नरकमा प्रवेश पाउनेहरु ।

فَأَمَّا مَنْ تَابَ وَآمَنَ وَعَمِلَ صَالِحًا فَعَسَىٰ أَنْ يَكُونَ مِنَ الْمُفْلِحِينَ ﴿٦٧﴾

(६७) हो जुन व्यक्तिले क्षमा माँगेर ईमान स्वीकार गऱ्यो तथा पुण्यका कार्य गरे, विश्वास छ कि त्यो मोक्ष प्राप्त गर्नेहरुमध्ये हुनेछ ।

وَرَبُّكَ يَخْلُقُ مَا يَشَاءُ وَيَخْتَارُ ۗ مَا كَانَ لَهُمُ الْخِيَرَةُ ۚ سُبْحَانَ اللَّهِ وَتَعَالَىٰ عَمَّا يُشْرِكُونَ ﴿٦٨﴾

(६८) तथा तपाईंको प्रभु जे चाहन्छ पैदा गर्दछ तथा जसलाई चाहन्छ, उनीहरुमध्ये कसैलाई कुनै अधिकार छैन,[1] अल्लाहको लागि नै पवित्रता छ, त्यो उच्च छ प्रत्येक त्यस कुरोभन्दा जसलाई मानिसहरु साझा बनाउँछन् ।

وَرَبُّكَ يَعْلَمُ مَا تُكِنُّ صُدُورُهُمْ وَمَا يُعْلِنُونَ ﴿٦٩﴾

(६९) तथा तपाईंको प्रभु सबै कुरा जान्दछ जे-जति उनीहरु आफ्ना छातिमा लुकाउँछन् तथा जे-जति व्यक्त गर्दछन् ।

وَهُوَ اللَّهُ لَا إِلَٰهَ إِلَّا هُوَ ۖ لَهُ الْحَمْدُ فِي الْأُولَىٰ وَالْآخِرَةِ ۖ وَلَهُ الْحُكْمُ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٧٠﴾

(७०) तथा त्यही अल्लाह हो, त्यसको अतिरिक्त पूजा योग्य कोही अन्य छैन, लोक तथा परलोकमा उसैको प्रशंसा छ । उसैका लागि शासन छ तथा उसैतिर तिमी सबै फर्काइनेछौ ।

قُلْ أَرَأَيْتُمْ إِنْ جَعَلَ اللَّهُ عَلَيْكُمُ اللَّيْلَ سَرْمَدًا إِلَىٰ يَوْمِ الْقِيَامَةِ مَنْ إِلَٰهٌ غَيْرُ اللَّهِ يَأْتِيكُمْ بِضِيَاءٍ ۖ أَفَلَا تَسْمَعُونَ ﴿٧١﴾

(७१) भनिदिनुस् कि हेर, यदि अल्लाह तआ़लाले राति मात्रै केयामतसम्म निरन्तर गरिदियो भने अल्लाहबाहेक को (ईश्वर-पूज्य) छ जो तिम्रो नजिक दिनको प्रकाश ल्याउन सक्छ ? के तिमी सुन्दैनौ ?

قُلْ أَرَأَيْتُمْ إِنْ جَعَلَ اللَّهُ عَلَيْكُمُ النَّهَارَ سَرْمَدًا إِلَىٰ يَوْمِ الْقِيَامَةِ مَنْ إِلَٰهٌ غَيْرُ اللَّهِ

(७२) सोध्नुस् कि यो पनि बताइदेउ कि यदि अल्लाह (तआ़ला) तिमीमाथि निरन्तर केयामतसम्म दिन मात्र राख्यौ भने पनि अल्लाह तआ़लाका अतिरिक्त को (ईश्वर-पूज्य) छ जो तिम्रो पासमा रात्रि ल्याउन सक्छ,

[1] अर्थात् अल्लाह तआ़ला सर्वशक्तिमान छ । त्यसका समक्ष कसैलाई मूलत: कुनै अधिकार छैन, त त्यसपछि कोही अन्य सर्वशक्तिमान कसरी हुनसक्छ ।

يَأْتِيكُم بِلَيْلٍ تَسْكُنُونَ فِيهِ ۖ أَفَلَا تُبْصِرُونَ ﴿٧٢﴾

जसमा तिमी विश्राम गर्नसक, के तिमी देखिराखेका छैनौ ?

وَمِن رَّحْمَتِهِ جَعَلَ لَكُمُ اللَّيْلَ وَالنَّهَارَ لِتَسْكُنُوا فِيهِ وَلِتَبْتَغُوا مِن فَضْلِهِ وَلَعَلَّكُمْ تَشْكُرُونَ ﴿٧٣﴾

(७३) तथा उसैले त तिम्रा लागि आफ्नो कृपा एवं दयाले दिन-रात निर्धारित गरिदिएको छ ताकि रात्रि तिमी विश्राम गर्नसक तथा दिनमा त्यसद्वारा (पठाइएको) जीविकाको खोज गर ।[1] यो यसकारण कि तिमी कृतज्ञता व्यक्त गर ।[2]

[1]दिन तथा रात, यी दुबै अल्लाहका बहुत ठूला बरदान हो । रात्रिलाई अन्धकारमय बनाएर मानिसहरुका लागि विश्रामको समय प्रदान गऱ्यो । यस अन्धकारका कारण सम्पूर्ण सृष्टि सुत्न तथा विश्राम गर्न बाध्य छ । अन्यथा यदि विश्राम गर्ने तथा निद्राका लागि आ-आफ्नो समय भएको भए त कोही पनि पूर्णरुपले सुत्ने अवसर पाउँदैनथे, जबकि व्यवसाय तथा व्यापारलाई सुचाररुपले संचालनका लागि निद्रा पूर्ण हुनु अत्यन्त आवश्यक छ । यस बिना स्फूर्ति प्राप्त हुँदैन । यदि केही मानिस सुतिरहेका हुन्थे तथा केही व्यवसायमा व्यस्त हुन्थे भने सुत्नेहरुको निन्द्रामा व्यवधान पर्थ्यो, यसका अतिरिक्त मानिसहरु एक-अर्काको सहयोगवाट बञ्चित रहन्थे, जबकि संसारको प्रवन्ध एक-अर्काको सहायता एवं सहयोगमा आधारित छ, यसकारण अल्लाहले रातलाई अन्धकार प्रदान गऱ्यो । यसैप्रकार दिनलाई प्रकाशमय वनायो ताकि प्रकाशका कारण मनुष्य आफ्नो व्यवसाय तथा व्यापार सुचाररुपले गर्न सकोस् । दिनको यो प्रकाश नभएको भए त मनुष्यहरुलाई जुन कठिनाइहरुको सामना गर्नुपर्थ्यो, त्यसलाई प्रत्येक व्यक्ति सरलताले बुझ्दछ तथा त्यसको ज्ञान राख्दछ ।

[2]अल्लाह तआलाले आफ्ना यी वरदानहरुका माध्यमबाट आफू एक (एक्लो) हुनुलाई प्रमाणित गरेको छ कि बताउ यदि अल्लाह तआला दिन तथा रात्रिको यस व्यवस्थालाई समाप्त गरी सदैवका लागि तिमीमथि रात्रि थोपदिन्छ भने के अल्लाहका अतिरिक्त कुनै देवता यस्तो छ जो तिमीलाई दिनको प्रकाश प्रदान गर्नसक्छ ? अथवा यदि त्यो सधैंका लागि दिनमात्र राख्दछ भने त के तिमीलाई रात्रिको अन्धकार उपलब्ध गराउन सक्छ जसमा तिमी विश्राम गर्नसक ? होइन, कदापि होइन । यो केवल अल्लाहको अत्यन्त दया एवं कृपा हो कि उसले दिन र रात्रिको यस्तो नियन्त्रित नियम बनाएको छ कि रात्रि आउँछ त दिनको प्रकाश समाप्त भईदिन्छ, तथा सम्पूर्ण सृष्टि विश्राम गर्दछ तथा रात्रि जान्छ भने दिनको प्रकाशवाट समस्त संसारका सबै वस्तुहरु स्पष्ट हुन्छन् तथा मनुष्य परिश्रम तथा कमाईद्वारा अल्लाहको कृपा (जीविका) को खोजी गर्दछ ।

[3]अर्थात् अल्लाहको प्रशंसा एवं महिमाको पनि वर्णन गर (यो मौखिक कृतज्ञता हो) तथा अल्लाहद्वारा प्रदान गरिएका धन, शक्ति, एवं योग्यतालाई त्यसका आदेश एवं निर्देशहरुका अनुसार प्रयोग गर (यो व्यवहारिक कृतज्ञता हो)

وَيَوۡمَ يُنَادِيهِمۡ فَيَقُولُ أَيۡنَ شُرَكَآءِيَ ٱلَّذِينَ كُنتُمۡ تَزۡعُمُونَ ۝٧٤

(७४) तथा जुन दिन पुकारेर अल्लाह (तआला) भन्नेछ कि जसलाई तिमी मेरा साझेदार ठानेका थियौ उनीहरु कहाँ छन् ?

وَنَزَعۡنَا مِن كُلِّ أُمَّةٖ شَهِيدٗا فَقُلۡنَا هَاتُواْ بُرۡهَٰنَكُمۡ فَعَلِمُوٓاْ أَنَّ ٱلۡحَقَّ لِلَّهِ وَضَلَّ عَنۡهُم مَّا كَانُواْ يَفۡتَرُونَ ۝٧٥

(७५) तथा हामी प्रत्येक सम्प्रदायबाट एउटा साक्षी अलग गर्नेछौं[1] तथा भन्नेछौं कि आफ्ना तर्क प्रस्तुत गर ।[2] त त्यस समय जानिहाल्नेछन् कि सत्य अल्लाहको तर्फबाट हो[3] तथा जे-जति झूठ उनीहरु रचिराखेका थिए सबै उनको पासबाट हराइहाल्नेछन् ।[4]

إِنَّ قَٰرُونَ كَانَ مِن قَوۡمِ مُوسَىٰ فَبَغَىٰ عَلَيۡهِمۡۖ وَءَاتَيۡنَٰهُ مِنَ ٱلۡكُنُوزِ مَآ إِنَّ مَفَاتِحَهُۥ لَتَنُوٓأُ بِٱلۡعُصۡبَةِ أُوْلِي ٱلۡقُوَّةِ

(७६) कारुन थियो त मूसाका समुदायबाट परन्तु उनीहरुमाथि अत्याचार गर्न थालेको थियो,[5] हामीले उसलाई यति अधिक कोष दिएका थियौं कि कैयन् शक्तिशाली मानिस कठिनाईले त्यसका साँचोहरु उचाल्न सक्दथे ।[6] एकपटक उसका समुदायले

[1]यस साक्षीसित तात्पर्य पैग़म्बर हो । अर्थात् प्रत्येक सम्प्रदायका पैग़म्बरलाई त्यस सम्प्रदायबाट अलग उभ्याइदिनेछौं ।

[2]अर्थात् संसारमा मेरा पैग़म्बरहरुका एकेश्वरवादको आमन्त्रणका उपरान्त तिमी जो मेरा साझेदार बनाउथ्यौ तथा मेरो साथमा उनको पनि पूजा गर्दथ्यौ, त्यसको तर्क प्रस्तुत गर ।

[3]अर्थात् उनीहरु परेशान एवं स्तब्ध उभिएका हुनेछन्, कुनै उत्तर तथा तर्क उनलाई आउने छैन ।

[4]अर्थात् उनका काम आउने छैनन् ।

[5]आफ्ना समुदाय इस्राईलको सन्तानमाथि त्यसको अत्याचार यो थियो कि आफ्नो धन-सम्पत्तिका बाहुल्यका कारण उनको अवहेलना (शोषण) गर्दथ्यो । केही विद्वानहरु भन्दछन् कि फ़िरऔनको तर्फबाट यो आफ्नो समुदाय इस्राईलको सन्तानमाथि कर्मचारी नियुक्त थियो तथा उनीमाथि अत्याचार गर्दथे ।

[6] تَنُوءُ को अर्थ हो تَمِيلُ (झुक्नु), अर्थात् जुनप्रकार कोही व्यक्ति ठूलो बोझ उचाल्छ त बोझका कारण यताउता डग्मगाउँछ, त्यसका साँचाहरुको बोझ यति अधिक थियो कि एउटा समूह पनि त्यसलाई उचाल्दाखेरि कठिनाई तथा कष्टको अनुभव गर्दथ्यो ।

إِذْ قَالَ لَهُ قَوْمُهُ لَا تَفْرَحْ إِنَّ اللَّهَ لَا يُحِبُّ الْفَرِحِينَ ⑯

उससित भने कि घमण्ड नगर,[1] अल्लाह (तआला) घमण्ड गर्नेहरुसित प्रेम गर्दैन ।[2]

وَابْتَغِ فِيمَا آتَاكَ اللَّهُ الدَّارَ الْآخِرَةَ وَلَا تَنْسَ نَصِيبَكَ مِنَ الدُّنْيَا وَأَحْسِنْ كَمَا أَحْسَنَ اللَّهُ إِلَيْكَ وَلَا تَبْغِ الْفَسَادَ فِي الْأَرْضِ إِنَّ اللَّهَ لَا يُحِبُّ الْمُفْسِدِينَ ⑰

(७७) तथा जे-जति अल्लाह तआलाले तिमीलाई प्रदान गरेको छ त्यसमध्येबाट आख़िरतको घरको निर्माण गर[3] तथा आफ्नो सांसारिक भागलाई नबिर्स[4] तथा जस्तो कि अल्लाहले उनीमाथि उपकार गरेको छ तिमी पनि सद्व्यवहार गर[5] तथा देशमा उपद्रवको इच्छा नगर,[6] विश्वास गर कि अल्लाह तआला उपद्रवीहरुलाई माया गर्दैन ।

قَالَ إِنَّمَا أُوتِيتُهُ عَلَىٰ عِلْمٍ

(७८) कारुनले भने यो सबै जति मलाई मेरो आफ्नो ज्ञानको कारण दिइएको छ,[7] के

[1]अर्थात् धन-सम्पत्तिमाथि गर्व एवं घमण्ड नगर । केही ज्ञाताहरुले कंजुसी अर्थ लगाएका छन्, अर्थात कंजुसी नगर ।

[2]अर्थात् गर्व तथा अहंकार गर्नेहरुलाई अथवा कंजुसी गर्नेहरुलाई प्रिय ठान्दैन ।

[3]अर्थात् आफ्ना धनलाई यस्ता स्थान तथा मार्गहरुमा व्यय गर जो अल्लाह तआलालाई प्रिय होस् । यसप्रकार आख़िरत बन्नेछ तथा त्यहाँ त्यसको तिमीलाई प्रतिकार एवं प्रतिफल प्राप्त हुन्छ ।

[4]अर्थात् संसारका उचित कुराहरुमा पनि सन्तुलनका साथ व्यय गर । संसारका उचित वस्तुहरु के हुन् ? खाद्य, वस्त्र, घर एवं विवाह आदि । अर्थ यो हो कि जुनप्रकार तिमीमाथि तिम्रो प्रभुको अधिकार छ, त्यसैप्रकार तिम्रो आफ्नो प्राण, श्रीमती, बच्चाहरु एवं अतिथिहरु आदिको पनि अधिकार छ । प्रत्येक अधिकारीलाई त्यसको अधिकार देउ।

[5]अल्लाहले तिमीलाई धन प्रदान गरी तिमीमाथि उपकार गरेको छ, तिमी जीवहरुमाथि व्यय गरी उनीहरुमाथि उपकार गर ।

[6]अर्थात् तिम्रो उद्देश्य धर्तीमा आतङ्क (उपद्रव) फैलाउनु नहोस् । त्यसैप्रकार जीवहरुका साथ सद्व्यवहारको ठाउँ दुर्व्यवहार नगर, न पाप गर कि यी सबै कुराहरुबाट आतङ्क फैलाउन्छ ।

[7]यी शिक्षाहरुको उत्तरमा उसले यो भन्यो । उसको प्रयोजन यो हो कि मलाई धनार्जन तथा व्यापारको जुन दक्षता छ, यो धन त त्यसको परिणाम एवं फल हो, अल्लाहको कृपा तथा दयाको यससँग के सम्बन्ध छ ? दोस्रो अनुवाद यो गरिएको छ कि अल्लाहले

عِنْدِىْ ؕ اَوَلَمْ يَعْلَمْ اَنَّ اللّٰهَ قَدْ اَهْلَكَ مِنْ قَبْلِهٖ مِنَ الْقُرُوْنِ مَنْ هُوَ اَشَدُّ مِنْهُ قُوَّةً وَّاَكْثَرُ جَمْعًا ؕ وَلَا يُسْـَٔلُ عَنْ ذُنُوْبِهِمُ الْمُجْرِمُوْنَ ﴿٧٨﴾

(अहिलेसम्म उसलाई यो ज्ञात भएन कि अल्लाह (तआला) ले त्यसभन्दा पूर्व धेरै वस्तीवालाहरुलाई विध्वस्त गरिदिए, जो त्यसभन्दा अत्याधिक शक्तिशाली तथा अत्याधिक धनवान थिए,[1] तथा पापीहरुसित उनका पापहरुको सोधपूछ यस्तो समयमा गरिंदैन ।[2]

मलाई यो धन प्रदान गरेको छ तब उसले आफ्नो ज्ञानका कारण दिएको छ कि म योग्य छु तथा मेरो लागि उसले यो रुचाएको छ। जस्तो अन्य स्थानमा मनुष्यहरुको एउटा अन्य कथन अल्लाह तआलाले वर्णन गरेको छ :"जब मनुष्यलाई दुख पुग्दछ त हामीलाई पुकार्दछ, अनि जब हामी उसलाई आफ्नो अनुकम्पा प्रदान गर्दछौं तव भन्दछ," ﴿إِنَّمَا أُوتِيتُهُ عَلَىٰ عِلْمٍ﴾

"मलाई यो वरदान यसकारण प्राप्त भयो कि अल्लाहको ज्ञानमा म यसको योग्य थिएँ ।" (सूर: अल-कसस-७८)

एक अन्य स्थानमा भने: "जब हामी मनुष्यहरुमाथि दुखका पश्चात आफ्नो दया गर्दछौं तव भन्दछ ।" ﴿هٰذَا لِي﴾ أي هذا أستحقه

"यो त मेरो अधिकार हो" (सूर: हा.मीम.अस्सजदा:-५०) (इब्ने कसीर)

केही विद्वानहरु भन्दछन् कि कारुनलाई कीमया (स्वर्ण बनाउनु) को ज्ञान थियो, यहाँ यही तात्पर्य छ, यसै ज्ञानको आधारमा उसले यति धन कमाएको थियो । परन्तु इमाम इब्ने कसीर यस ज्ञानलाई सर्वथा झूठ तथा धोका भन्दछन् । कुनै व्यक्तिमा यस कुराको शक्ति छैन कि त्यसले कुनै वस्तुको वास्तविकतालाई परिवर्तित गर्न सकोस् । यसकारण कारुनको लागि पनि यो सम्भव थिएन कि त्यसले अन्य धातुहरुलाई परिवर्तित गरी स्वर्ण बनाउन सक्थ्यो तथा यसप्रकार थुप्रै धन एकत्रित गर्थ्यो ।

[1]अर्थात् वल तथा धनको अधिकता यो श्रेष्ठताको कारण होइन । यदि यस्तो भएको भए पूर्वकालीन समुदाय नष्ट हुँदैनथे । यसकारण कारुनले आफ्नो धनमाथि घमण्ड गर्नु तथा त्यसलाई आफ्नो श्रेष्ठताका कारण भन्नुको कुनै औचित्य छैन ।

[2]अर्थात् जब पाप यति अधिक संख्यामा होस् कि उनका कारण त्यो यातनाको पात्र घोषित होस् त उनीसित सोधपूछ गरिंदैन, सहसा उनलाई समातिहालिनेछ ।

فَخَرَجَ عَلٰى قَوْمِهٖ فِىْ زِيْنَتِهٖ ؕ قَالَ الَّذِيْنَ يُرِيْدُوْنَ الْحَيٰوةَ الدُّنْيَا يٰلَيْتَ لَنَا مِثْلَ مَآ اُوْتِىَ قَارُوْنُ ۙ اِنَّهٗ لَذُوْ حَظٍّ عَظِيْمٍ ۝

(७९) अतः (कारून) पूरा शोभाका साथ[1] आफ्नो समुदायको जमघटमा निस्क्यो,[2] त सांसारिक जीवनलाई रुचाउनेहरुले भने कि काश हामीलाई कुनै प्रकार त्यो प्राप्त हुन्थ्यो जो कारूनलाई दिइएको छ, यो त निकै नै सौभाग्यशाली छ ।

وَقَالَ الَّذِيْنَ اُوْتُوا الْعِلْمَ وَيْلَكُمْ ثَوَابُ اللّٰهِ خَيْرٌ لِّمَنْ اٰمَنَ وَعَمِلَ صَالِحًا ۚ وَلَا يُلَقّٰىهَآ اِلَّا الصّٰبِرُوْنَ ۝

(८०) तथा ज्ञानीहरुले उनलाई सम्झाए कि खेदको कुरो छ, उत्तम वस्तु त त्यो हो जो पुण्यको रुपमा उनलाई प्राप्त हुनेछ जो अल्लाहमाथि ईमान सुदृढ गर्छन् तथा पुण्यका काम गर्दछन् ।[3] यो कुरा उनैको हृदयमा पारिन्छ जो धैर्यवान् तथा सहनशील हुन्छन् ।

فَخَسَفْنَا بِهٖ وَبِدَارِهِ الْاَرْضَ ۫ فَمَا كَانَ لَهٗ مِنْ فِئَةٍ

(८१) (अन्ततः) हामीले उसलाई त्यसको महलसहित धर्तीमा धसाइदियौं,[4] तथा अल्लाहका अतिरिक्त

[1]अर्थात् शोभा एवं श्रृङ्गार तथा सेवक एवं कर्मचारीहरुसँग ।

[2]यी भन्ने को थिए ? हे विद्वानका निकट ईमानवाल नै थिए जो उसको धन तथा अहंकारको प्रदर्शनबाट प्रभावित भएका थिए तथा केहीका निकट काफ़िर थिए ।

[3]अर्थात् जोसित धर्मको ज्ञान थियो तथा संसार एवं त्यसको प्रदर्शनको मूल वास्तविकतासित परिचित थिए, उनीहरुले भने कि यो के हो, केही पनि होइन । अल्लाहले ईमान भएका तथा सत्कर्मीहरुका लागि जो प्रतिफल तथा पुण्य राखेको छ, त्यो त्यसभन्दा कैयन् अधिक उत्तम छ । जस्तो हदीस कुद्सीमा छ, अल्लाह तआला भन्दछ : "मैले आफ्ना पुण्यकर्मी भक्तहरुका लागि यस्ता-यस्ता कुरा तयार गरेको छु जसलाई कुनै आँखाले देखेन, कुनै कानले सुनेन तथा न कसैको ज्ञानमा आयो ।" (अल-बुख़ारी किताबुत तौहीद, मुस्लिम किताबुल ईमान, बाब अदना अह्लिल जन्नः मंजिलतन्)

[4]अर्थात् يُلَقّٰىهَا मा ها सर्वनाम कथनतिर फर्कन्छ तथा यो कथन अल्लाहको हो । यदि उसलाई ज्ञानीहरुकै कथनापूरक मानिन्छ भने ها को संकेत स्वर्गतिर हुनेछ अर्थात् स्वर्गका अधिकारी ती धैर्यवान नै हुनेछन् जो सांसारिक मायामोहबाट अलग तथा आख़िरतका जीवनमा रुचि राख्नेहरु हुनेछन् ।

[5]अर्थात् कारूनलाई यसका घमण्डका कारण त्यसका महल तथा कोषसहित धर्तीमा धसाइयो । हदीसमा छ, रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "एउटा व्यक्ति आफ्नो लुँगी (धोती) धर्तीमा घिसार्दै गइराखेको थियो

يَنْصُرُوْنَهٗ مِنْ دُوْنِ اللّٰهِ وَمَا كَانَ مِنَ الْمُنْتَصِرِيْنَ ﴿٨١﴾

कुनै गिरोह (समूह) उसको सहायताका लागि तयार भएन न त्यो स्वयं आफूलाई बचाउने मध्येबाट हुनसक्यो ।

وَاَصْبَحَ الَّذِيْنَ تَمَنَّوْا مَكَانَهٗ بِالْاَمْسِ يَقُوْلُوْنَ وَيْكَاَنَّ اللّٰهَ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ مِنْ عِبَادِهٖ وَيَقْدِرُ لَوْلَآ اَنْ مَّنَّ اللّٰهُ عَلَيْنَا لَخَسَفَ بِنَا وَيْكَاَنَّهٗ لَا يُفْلِحُ الْكٰفِرُوْنَ ﴿٨٢﴾

(८२) तथा जो मानिस हिजोसम्म उसको पदसम्म पुग्ने आशा गरिराखेका थिए, उनीहरु आज भन्नथाले कि के तिमी देख्दैनौ[1] कि अल्लाह (तआला) नै आफ्ना भक्तहरुमध्ये जसलाई चाहन्छ जीविका अधिक गरिदिन्छ तथा कम पनि, यदि अल्लाह (तआला) हामीमाथि उपकार नगरेको भए त हामी पनि धसाइदिन्थ्यौं,[2] के देख्दैनौ कि कृतघ्नहरुलाई कहिल्यै सफलता प्राप्त हुँदैन ।[3]

تِلْكَ الدَّارُ الْاٰخِرَةُ نَجْعَلُهَا لِلَّذِيْنَ لَا يُرِيْدُوْنَ عُلُوًّا

(८३) परलोकको यो (रमणीय) घर हामी उनैका लागि निर्धारित गर्दछौं जो धर्तीमा अहङ्कार एवं गर्व गर्दैनन्, न उपद्रव

---

(अल्लाहलाई उसको यो अहङ्कार राम्रो लागेन) तथा उसलाई धर्तीमा धसाइदियो । त्यो केयामतसम्म धर्तीमा भाँसिदै जानेछ ।" (अल-बुख़ारी किताबुल लिबास)

[1] مكان सित तात्पर्य त्यो सांसारिक मान-मर्यादा हो जो संसारमा कसैलाई सामयिक रुपले प्राप्त हुन्छ, जस्तो कारूनलाई प्राप्त भएको थियो । अर्थ यो हो कि कारुनको जस्तो धन तथा वैभवका अभिलाषीहरुले जब कारुनको शिक्षाप्रद परिणाम देखे पश्चात भने कि धन-सम्पत्ति यस कुराको प्रमाण होइन कि अल्लाह तआ़ला त्यस धनवानसित प्रसन्न पनि छ । के तिमीले देखेनौ कि अल्लाह तआ़ला धन कसैलाई अधिक दिन्छ तथा कसैलाई कम । यसको सम्बन्ध त्यसको इच्छा, विवेक तथा नीतिसित छ, जसलाई उसका अतिरिक्त कोही जान्दैन । धनको बाहुल्यता उसको प्रसन्नताको तथा धनको कमी उसको अप्रसन्नताको प्रमाण होइन, न यो श्रेष्ठताको माप नै हो ।

[2]अर्थात् हामी पनि त्यस दुष्परिणाममा पुग्थ्यौ जसमा कारुन पुग्यो ।

[3]अर्थात् कारुनले धन पाएर कृतज्ञताको सट्टा कृतघ्नता तथा अवज्ञाको मार्ग अपनायो त हेरिहाल उसको दुष्परिणाम पनि कस्तो भयो ?

فِي الْأَرْضِ وَلَا فَسَادًا ۚ وَالْعَاقِبَةُ لِلْمُتَّقِينَ ﴿٨٣﴾

को इच्छा राख्दछन् । तथा परहेज़गारहरु (संयमीहरु) का लागि अत्यन्त उत्तम प्रतिफल छ ।[1]

مَنْ جَاءَ بِالْحَسَنَةِ فَلَهُ خَيْرٌ مِّنْهَا ۖ وَمَنْ جَاءَ بِالسَّيِّئَةِ فَلَا يُجْزَى الَّذِينَ عَمِلُوا السَّيِّئَاتِ إِلَّا مَا كَانُوا يَعْمَلُونَ ﴿٨٤﴾

(८४) जो व्यक्ति पुण्य ल्याउनेछ उसलाई त्यसभन्दा उत्तम प्राप्त हुनेछ[2] तथा जो पाप लिएर आउनेछ त यस्ता कुकर्म गर्नेहरुलाई उनका त्यसै कर्मको प्रतिफल प्रदान गरिनेछ जो उनीहरु गर्दथे ।[3]

إِنَّ الَّذِي فَرَضَ عَلَيْكَ الْقُرْآنَ لَرَادُّكَ إِلَىٰ مَعَادٍ ۚ قُل رَّبِّي

(८५) जुन (अल्लाह) ले तपाईंमाथि कुर्आन अवतरित गरेको छ[4] त्यो तपाईंलाई पुन: प्रथम स्थानमा ल्याउनेछ ।[5] भनिदिनुस् कि

[1] عُلُوٌّ को अर्थ हो अत्याचार तथा अति, अरु मानिसहरुभन्दा आफूलाई श्रेष्ठ तथा उच्च ठान्नु तथा कहलाउनु, गर्व, अहङ्कार तथा घमण्ड गर्नु तथा فساد को अर्थ हो अनर्थ मानिसहरुको माल हडप गर्नु अथवा अवज्ञा गर्नु कि यी दुबै कुराहरुबाट धर्तीमा उपद्रव फैलिन्छ । आदेश भयो कि अल्लाहसित भय गर्नेहरुका कर्म तथा आचरण यी त्रुटि एवं पापहरुबाट शुद्ध हुन्छन् तथा अभिमानको साटो उनमा विनम्रता, अवहेलनाको साटो आज्ञाकारिता हुन्छ तथा आख़िरतको घर (स्वर्ग) तथा सुपरिणाम उनैको पक्षमा आउनेछ ।

[2] अर्थात् कमसेकम प्रत्येक भलाई (पुण्यको प्रतिफल) दसगुना अवश्य प्राप्त हुनेछ, तथा जसको लागि अल्लाह चाहन्छ यसभन्दा पनि अधिक र अझ बढी प्रदान गर्नेछ।

[3] अर्थात् भलाईको प्रतिफल त बढाएर दिइनेछ तर पापको प्रतिफल पापकै समान नै प्राप्त हुनेछ । अर्थात् भलाईको परिणाममा अल्लाहको दया तथा कृपाको तथा नराम्रोको परिणाममा त्यसको न्यायको प्रदर्शन हुनेछ ।

[4] अर्थात् यसको पाठ तथा यसको प्रचार-प्रसार तपाईंको कर्तव्य हो ।

[5] अर्थात् तपाईंको जन्मस्थल मक्का, जहाँबाट तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) लाई निस्कन बाध्य गरिएको थियो । आदरणीय इब्ने अब्बासबाट उधृत सहीह बुख़ारीमा यसको यही व्याख्या प्राप्त हुन्छ । अत: हिज़रतको आठ वर्ष पश्चात अल्लाहको यो वचन पूरा भयो तथा तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) ले आठ हिज़रीमा विजयी रुपमा मक्का नगरमा प्रवेश गर्नुभयो । केही विद्वानहरुले معاد सित तात्पर्य केयामत लिएका छन् । अर्थात केयामतका दिन तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) लाई आफूतिर फर्काउनेछ तथा रिसालतको प्रचारको विषयमा सोध्नेछ ।

اَعۡلَمُ مَنۡ جَآءَ بِالۡهُدٰى وَمَنۡ هُوَ فِىۡ ضَلٰلٍ مُّبِيۡنٍ ﴿۸۵﴾

मेरो प्रभु त्यसलाई पनि राम्ररी जान्दछ जो मार्गदर्शन ल्याएको छ तथा त्यसलाई पनि जो खुल्ला विचलनमा छ ।[1]

وَمَا كُنۡتَ تَرۡجُوۡۤا اَنۡ يُّلۡقٰٓى اِلَيۡكَ الۡكِتٰبُ اِلَّا رَحۡمَةً مِّنۡ رَّبِّكَ فَلَا تَكُوۡنَنَّ ظَهِيۡرًا لِّلۡكٰفِرِيۡنَ ﴿۸۶﴾

(८६) तथा तपाईंले त कहिल्यै यो सोच्नु पनि भएन कि तपाईंतिर किताब अवतरित गरिनेछ[2] तर यो तपाईंको प्रभुको कृपाले (अवतरित भयो) ।[3] अब तपाईं कदापि काफ़िरहरुको सहायक नहुनुहोस् ।[4]

وَلَا يَصُدُّنَّكَ عَنۡ اٰيٰتِ اللّٰهِ بَعۡدَ اِذۡ اُنۡزِلَتۡ اِلَيۡكَ وَادۡعُ اِلٰى رَبِّكَ

(८७) (ध्यान रहोस् कि) यी काफ़िरहरु तपाईंलाई अल्लाहका आयतहरुको प्रचार गर्नबाट रोक्न नसकून्[5] यसपश्चात कि यो तपाईंतिर



[1]यो मूर्तिपूजकहरुको त्यस उत्तरमा छ जो उनीहरु नबी सल्लल्लाहु अलैहि वसल्लमलाई उनका पैतृक एवं प्रचलित धर्मबाट विमुख हुनका कारण पथभ्रष्ट ठान्दथे । भन्नुभयो, "मेरो प्रभु राम्ररी जान्दछ कि पथभ्रष्ट म हूँ जो अल्लाहको तर्फबाट प्रकाश लिएर आएको छु अथवा तिमी हौ अल्लाहको तर्फबाट आएको प्रकाशलाई स्वीकार गरिराखेका छैनौ ?"

[2]अर्थात् नबूअतभन्दा पूर्व तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) को विचारमा पनि थिएन कि तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) लाई रिसालतका लागि रोजिनेछ तथा तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) माथि अल्लाहको किताब अवतरित हुनेछ ।

[3]अर्थात् यो नबूअत तथा किताबले सुशोभित गर्नु अल्लाहको विशेष कृपाको फल हो, जो तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) माथि भयो । यसबाट ज्ञात भयो कि नबूअत कुनै यस्तो कुरा होइन जसलाई परिश्रम, प्रयत्न तथा प्रयासले प्राप्त गरिंदै आइरहेको होस् । अपितु यो सर्वथा अल्लाहको एउटा वरदान थियो । अल्लाह तआ़ला जसलाई चाहयो आफ्ना भक्तहरु मध्येबाट नबूअत तथा रिसालतले सुशोभित गर्दैरहयो । यहाँसम्मकि परम आदरणीय मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई यस स्वर्णिम श्रृङ्खलाको अन्तिम कडी घोषित गरी त्यसलाई समाप्त गरिदिइयो ।

[4]अब यस अनुग्रह तथा अल्लाहको कृपाको कृतज्ञता तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) यसप्रकार व्यक्त गनुस् कि काफ़िरहरुको सहायता तथा पक्षधर नबन्नुहोस् ।

[5]अर्थात् यी काफ़िरहरुका कुरा उनका यातनाहरु तथा उनको तर्फबाट धर्म प्रचार-प्रसारमा विघ्न पार्न तपाईंलाई कुर्आ़नका पाठ तथा त्यसका प्रचार-प्रसारबाट नरोकिदेऊन् । बरु

وَلَا تَكُونَنَّ مِنَ الْمُشْرِكِينَ ۝٨٧

अवतरित गरियो, त आफ्नो प्रभुतिर आमन्त्रित गर्दैरहनुस् तथा शिर्क गर्नेहरु (मिश्रणवादीहरु) मध्येको नहुनुस् ।

وَلَا تَدْعُ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ ۘ لَا إِلَٰهَ إِلَّا هُوَ ۚ كُلُّ شَيْءٍ هَالِكٌ إِلَّا وَجْهَهُ ۚ لَهُ الْحُكْمُ وَإِلَيْهِ تُرْجَعُونَ ۝٨٨

(८८) तथा अल्लाह (तआला) को सँग कुनै अन्य देवतालाई नगुहार्नु,[1] अल्लाह (तआला) बाहेक कोही अन्य पूजनीय छैन, प्रत्येक वस्तु नाशवान छ परन्तु उसैको मुख[2] उसैको शासन छ[3] तथा तिमी उसैतिर फर्काइने छौ ।[4]

तपाईं (रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम) पूर्ण एकाग्रताले प्रभुतिर आमन्त्रण गर्ने काम (कार्य) गर्दैरहनुस् ।

[1]अर्थात् कुनै अन्यको इबादत (उपासना) नगर्नु, न प्रार्थनाद्वारा, न भोग-प्रसादले, न बलिद्वारा कि यी सबै उपासना हुन् जो केवल एक अल्लाहका लागि विशेष छन् । कुरआन करीममा विभिन्न स्थानहरुमा अल्लाहका अतिरिक्त कुनै अन्यको इबादतलाई पुकार्नु भनिएको छ, जसको उद्देश्य यसै बिन्दुलाई स्पष्ट गर्नु हो कि अल्लाहका अतिरिक्त कुनै अन्यलाई माध्यमहरुबाट टाढा मानेर पुकार्नु, उनीसित सहायता माँग्नु, विनय तथा प्रार्थनाहरु गर्नु यो उनको इबादत नै हो जसबाट मनुष्य मुश्रिक (अनेकेश्वरवादी) बन्दछ ।

[2] وَجْهَهُ (उसको मुख) सित तात्पर्य अल्लाह हो । अर्थात् अल्लाहका अतिरिक्त प्रत्येक वस्तु नश्वर छ ।

﴿كُلُّ مَنْ عَلَيْهَا فَانٍ * وَيَبْقَىٰ وَجْهُ رَبِّكَ ذُو الْجَلَالِ وَالْإِكْرَامِ﴾

> "धर्तीमा जो छन् सबै समाप्त हुनेहरु हुन् । मात्र तिम्रो प्रभुको मुख जो महानता एवं जो सम्मान भएको छ, शेष रहनेछ ।" (सूर: अर्रहमान-२६, २७)

[3]अर्थात् उसैको निर्णय, जो त्यो चाहन्छ, लागू हुन्छ तथा उसैको आदेश जसको त्यो इच्छा गर्दछ, चल्छ ।

[4]ताकि त्यसले सत्कर्मीहरुलाई उनको पुण्यको प्रतिफल तथा कुकर्मीहरुलाई उनको कुकर्मको दण्ड देओस् ।

## सूरतुल अनक़बूत-२९

سُوْرَةُ الْعَنْكَبُوْتِ

सूरः अनक़बूत मक्कामा अवतरित भयो तथा यसका उनान्सत्तरी आयतहरु तथा सात रूकूअ छन् ।

अल्लाहको नामबाट प्रारम्भ गर्दछु, जो अति दयालु एवं अति कृपालु छ ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

(१) अलिफ. लाम. मीम.

الٓمّٓ ①

(२) के मानिसहरुले यो सोचेका छन् कि उनको केवल यस कथनमा कि हामीले ईमान कायम गरेका छौं उनीहरु बिना परीक्षा लिइ नै छाडिदिनेछन् ?[1]

أَحَسِبَ النَّاسُ أَنْ يُّتْرَكُوْٓا أَنْ يَّقُوْلُوْٓا اٰمَنَّا وَهُمْ لَا يُفْتَنُوْنَ ②

(३) उनीभन्दा पूर्वका मानिसहरुलाई पनि राम्ररी जाँच्यौं,[2] निःसन्देह अल्लाह (तआला) उनीहरुलाई

وَلَقَدْ فَتَنَّا الَّذِيْنَ مِنْ قَبْلِهِمْ فَلَيَعْلَمَنَّ اللّٰهُ الَّذِيْنَ صَدَقُوْا

*सूरः अल-अनक़बूतको व्याख्या :*

[1]अर्थात् यो विचार कि केवल मुखले ईमान स्वीकार गर्नुका पश्चात परीक्षा नलिई उनलाई छोडिदिइनेछ, सही छैन । वरु उनलाई प्राण एवं धनका दुख तथा अन्य परीक्षाहरुद्वारा जाँचिनेछ ताकि राम्रो-नराम्रोको, सत्य-असत्यको, ईमान भएका तथा द्वयवादीबारे थाहा हुनसकोस् ।

[2]अर्थात् यो अल्लाहको नियम हो जो आदिदेखि चलिआइराखेको छ । यसकारण त्यसले यस सम्प्रदायका ईमान भएकाहरुको पनि परीक्षा लिनेछ जुनप्रकार पूर्वका समुदायहरुको परीक्षा गरियो । यी आयतहरुका अवतरण हुनुको विशेषताको कथनमा आउँछ कि सहावा किराम (नबीका सहचर) ले त्यस अत्याचार तथा क्रुरताको शिकायत (गुनासो) गरे जसका लक्ष्य मक्काका काफिरहरुतिरबाट उनीहरु बनेका थिए तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित दुआ (प्रार्थना) गर्नुको प्रार्थना गरे ताकि अल्लाह उनको सहायता गरोस् । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि यो आतङ्क तथा यातना त ईमान भएकाहरुका इतिहासको भाग हो । तिमीभन्दा पूर्व केही ईमान भएकाहरुको यो दशामा पुऱ्यायो कि उनलाई एउटा खाडल खनेर त्यसमा उभ्याई उनको टाउकोमा करौंती चलाइयो जसवाट उनका शरीर दुई भागमा विभाजित भए यसैप्रकार फलामका काइँयो उनको मांशमा हड्डीहरुसम्म पुऱ्याइयो परन्तु यी यातनाहरुले सत्य धर्मबाट विचलित गर्न सफल भएनन् । (सहीह बुख़ारी किताब अहादिसिल अम्बिया) आदरणीय अम्मार, उनकी माता आदरणीया सुमय्या तथा पिता आदरणीय यासिर, आदरणीय सुहेब, आदरणीय बेलाल तथा आदरणीय मिक़दाद

وَلَيَعْلَمَنَّ الْكٰذِبِيْنَ ﴿٣﴾

पनि जानिहाल्नेछ जो सत्य भन्दछन् तथा उनीहरुलाई पनि जानिहाल्नेछ, जो भ्रूठा छन् ।

اَمْ حَسِبَ الَّذِيْنَ يَعْمَلُوْنَ السَّيِّاٰتِ اَنْ يَّسْبِقُوْنَا ؕ سَآءَ مَا يَحْكُمُوْنَ ﴿٤﴾

(४) के जो कुकर्म गरिराखेका छन्, उनीहरुले यो ठानेका छन् कि उनीहरु हाम्रा नियन्त्रणबाट बाहिर हुनेछन् ?[1] यिनीहरु कस्तो नराम्रो विचार गरिराखेका छन् ।[2]

مَنْ كَانَ يَرْجُوْا لِقَآءَ اللّٰهِ فَاِنَّ اَجَلَ اللّٰهِ لَاٰتٍ ؕ وَهُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٥﴾

(५) जसलाई अल्लाहसित साक्षात्कार को आशा छ, त्यो अल्लाहद्वारा निर्धारित गरिएको समय निश्चित आउनेछ,[3] त्यो सर्वश्रेष्ठ, सर्वज्ञाता छ ।[4]

وَمَنْ جَاهَدَ فَاِنَّمَا يُجَاهِدُ لِنَفْسِهٖ ؕ

(६) तथा प्रत्येक प्रयत्न गर्नेले आफ्नै हितका लागि प्रयत्न गर्दछ । निःसन्देह

---

आदि (رضی الله عنهم) माथि इस्लामका प्रारम्भिक कालमा जुन अत्याचार तथा कष्ट पुऱ्याइए, ती इतिहासका पानाहरुमा सुरक्षित छन् । यी घटनाहरु नै यी आयतहरु अवतरित हुनुका कारण बने । तैपनि शब्दहरुको सामान्यताको आधारमा केयामत सम्मका ईमानवाला यसमा सम्मिलित छन् ।

[1]अर्थात् हामीबाट भाग्न सफल हुनेछन् तथा हाम्रो पकडमा आउन सक्नेछैनन्, यस्तो हुनेछैन ।

[2]अर्थात् अल्लाहका विषयमा यिनी कुन भ्रममा लिप्त छन्, जबकि त्यो सबै वस्तुहरुमाथि सामर्थ्यवान छ तथा प्रत्येक कुरोसित अवगत पनि । अनि त्यसको अवहेलना गरी त्यसको पकड तथा यातनाबाट कसरी भाग्न सक्नेछन् ?

[3]अर्थात् जसलाई आख़िरतमा विश्वास छ तथा त्यो प्रतिफल एवं पुण्यको आशाले सत्कर्म गर्दछ अल्लाह तआ़लाले त्यसका आशाहरु पूर्ण गर्नेछ तथा त्यसलाई त्यसका कर्महरुको पूरा प्रतिफल प्रदान गर्नेछ, किनकि केयामत निश्चित रुपले भएर नै रहनेछ तथा अल्लाहको न्यायलयको स्थापना अवश्य हुनेछ ।

[4]त्यो भक्तहरुका कुरा एवं प्रार्थनाहरु सुन्नेवाला तथा उनका गुप्त तथा प्रकट सबै कर्महरुको ज्ञाता छ । त्यसका अनुसार त्यसले फल तथा दण्ड पनि अवश्य दिनेछ ।

إِنَّ ٱللَّهَ لَغَنِيٌّ عَنِ ٱلْعَٰلَمِينَ ⑥

अल्लाह (तआला) सबै जगत्का सबैबाट निस्पृह छ ।[1]

وَٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ لَنُكَفِّرَنَّ عَنْهُمْ سَيِّـَٔاتِهِمْ وَلَنَجْزِيَنَّهُمْ أَحْسَنَ ٱلَّذِى كَانُوا۟ يَعْمَلُونَ ⑦

(७) तथा जसले विश्वास गरे तथा (सुन्नतका अनुरुप) राम्रा कर्म गरे, हामी उनका सबै पापहरुलाई उनीबाट समाप्त गरिदिनेछौं तथा उनका सत्कर्महरुको उत्तम प्रतिफल दिनेछौं ।[2]

وَوَصَّيْنَا ٱلْإِنسَٰنَ بِوَٰلِدَيْهِ

(८) हामीले प्रत्येक मनुष्यलाई आफ्नो माता-पितासित सद्व्यवहार गर्नुको शिक्षा दिएका छौं,[3]

[1]यसको अर्थ त्यही हो जो ﴿مَّنْ عَمِلَ صَٰلِحًا فَلِنَفْسِهِۦ﴾ (सूर: जासिया-१५) को हो, अर्थात जसले सत्कर्म गर्नेछ त्यसको लाभ उसैलाई हुनेछ । अन्यथा अल्लाह तआलालाई त भक्तहरुका कर्मको कुनै आवश्यकता छैन । यदि सम्पूर्ण धर्तीका मानिस अल्लाहसित भय गर्ने (संयमी) बन्छन् भने त त्यसको राज्यमा शक्ति एवं विस्तार हुनेछैन तथा सबै अवहेलना गर्ने बन्छन् भने उसको राज्यमा अलिकति पनि कमी आउने छैन । शब्दहरुका आधारमा यिनमा काफ़िरहरुसित धर्मयुद्ध गर्नुको पनि आदेश सम्मिलित छ कि यो पनि एकप्रकारको सत्कर्म नै हो ।

[2]अर्थात् यस कुराको उपरान्त कि अल्लाह तआ़ला सम्पूर्ण सृष्टिबाट निस्पृह छ, त्यसैले केवल आफ्नो कृपा तथा दयाले ईमानवालाहरुलाई उनका कर्मअनुसार प्रतिफल प्रदान गर्नेछ तथा एक-एक सत्कर्मका लागि कैयन् गुना प्रतिकार एवं पुण्य प्रदान गर्नेछ ।

[3]कुरआन करीमका विभिन्न स्थानहरुमा अल्लाह तआ़लाले आफ्नो एकता तथा इबादतको आदेश दिनुका साथै माता-पितासित सद्व्यवहार गर्नमाथि जोड दिइएको छ, जसबाट यस कुराको स्पष्टीकरण हुन्छ कि एकेश्वरवादका माँगहरुलाई उचित रुपमा त्यही बुझ्नसक्छ तथा निर्वाह गर्न सक्दछ जो माता-पिताको आज्ञा पालन तथा सेवा माँगहरुलाई बुझ्दछ तथा निर्वाह गर्दछ । जो व्यक्ति यो कुरा बुझ्न असमर्थ छ कि संसारमा उसको अस्तित्व माता-पिताको संयोगको परिणाम तथा उसको पालन-पोषण उनको असीमित कृपा एवं प्रेमको फल हो यसकारण मैले उनको सेवामा कुनै कमी तथा आज्ञा पालनमा उद्दण्डता गर्नुहुँदैन, त्यो अवश्य सृष्टिको स्रष्टालाई बुझ्न तथा त्यसको एकेश्वरवाद तथा इबादतका नियमहरु निर्वाह गर्नुमा पनि असमर्थ र हनेछ । यसैकारण हदीसहरुमा पनि माता-पितासँग सद्व्यवहार गर्नुमा बडो बल दिइएको छ एक हदीसमा माता-पिताको प्रसन्नता तथा उनको अप्रसन्नतालाई प्रभुको प्रसन्नता तथा अप्रसन्नताको कारण भनिएको छ ।

حُسْنًا ۖ وَإِن جَاهَدَاكَ لِتُشْرِكَ بِي مَا لَيْسَ لَكَ بِهِ عِلْمٌ فَلَا تُطِعْهُمَا ۚ إِلَيَّ مَرْجِعُكُمْ فَأُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ⑧

तर यदि उनीहरु यो प्रयत्न गर्दछन् कि तिमी मसँग त्यसलाई सम्मिलित गर जसको तिमीलाई ज्ञान छैन त उनको भनाइ नमान,[1] तिमी सबैलाई फर्कि मतिरै आउनुछ, अनि म प्रत्येक त्यस कुरासित जो तिमी गर्दथ्यौ, तिमीलाई अवगत गराउनेछौं ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَنُدْخِلَنَّهُمْ فِي الصَّالِحِينَ ⑨

(९) तथा जसले ईमान स्वीकार गरे तथा पुण्यका कार्य गरे, उनीहरुलाई हामीले आफ्ना पुण्य आत्मा भक्तहरुमा गर्नेछौं ।[2]

وَمِنَ النَّاسِ مَن يَقُولُ آمَنَّا بِاللَّهِ فَإِذَا أُوذِيَ فِي اللَّهِ جَعَلَ فِتْنَةَ النَّاسِ كَعَذَابِ اللَّهِ ۖ وَلَئِن جَاءَ نَصْرٌ مِّن رَّبِّكَ لَيَقُولُنَّ

(१०) तथा केही यस्ता पनि छन् जो (मुखले) भन्दछन् कि हामीले ईमान कायम गरेका छौं तर जब अल्लाहको मार्गमा कुनै दुख आइपर्दछ त मानिसहरुद्वारा कष्ट दिने कुरोलाई अल्लाह तआलाको यातनाको समान बनाउँदछन्,[3] परन्तु यदि



[1]अर्थात् माता-पिता यदि शिर्कको आदेश दिन्छन् (तथा त्यसैमा अन्य पापहरुको आदेश पनि सम्मिलित छ) तथा त्यसका लागि विशेष प्रयत्न पनि गर्दछन् (जस्तो कि مجاهدة शब्दबाट स्पष्ट छ) त्यसका आदेशहरुको पालन गर्नु हुँदैन, किनकि «لَا طَاعَةَ لِأَحَدٍ فِي مَعْصِيَةِ اللهِ تَبَارَكَ وَتَعَالَى» (मुसनद अहमद भाग ५ पृष्ठ ६६ तथा अल-सहीहः लिल-अलबानी संख्या १७९) "अल्लाहको अवहेलनामा कसैको आज्ञाको पालन छैन ।" यस आयतको अवतरण हुनुको विशेषतामा आदरणीय सअ्द बिन अबी वक्कासको घटना आउँछ कि उनी मुसलमान हुनु पश्चात उनकी माताले भनिन् कि म न भोजन गर्नेछु न पानी पिउने छु यहाँसम्मकि मरिहाल्नेछु अथवा तिमीले मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको नबूअतलाई अस्वीकार गरिदेउ, अन्त्यमा उनी आफ्नी माताको मुख बलपूर्वक खोलेर खुवाउँथे, जसको पश्चात यो आयत अवतरित भयो । (सहीह मुस्लिम, तिर्मिजी सूरः अल-अनकबूतको व्याख्या)

[2]अर्थात् यदि कसैका माता-पिता मूर्तिपूजक हुन्छन् भने ईमानवाला पुत्र पुण्य गर्नेहरुसँग हुनेछ, माता-पिताको साथ होइन । यसकारण चाहे माता-पिता संसारमा उसको अत्यन्त निकट भएपनि उसको धार्मिक प्रेम ईमानवालाहरुसित नै थियो, जसका कारण المرء مع من أحبَّ का अधीन त्यो सत्कर्मीहरुको समूहमा हुनेछ ।

[3]यसमा अवसरवादी अथवा क्षीण ईमानवालाको अवस्था वर्णन गरिएको छ कि ईमानका कारण उनलाई कष्ट पुग्दछ, त अल्लाहको यातना जस्तै त्यो उनका लागि असहनीय

إِنَّا كُنَّا مَعَكُمْ ۚ أَوَلَيْسَ اللَّهُ بِأَعْلَمَ بِمَا فِي صُدُورِ الْعَالَمِينَ ⑩

अल्लाहको सहायता आउँछ त[1] भन्दछन् कि हामी त तिमीहरुकै साथमा छौं,[2] के संसारका सबै मानिसहरुका हृदयमा जे-जति छ, त्यसबाट अल्लाह तआ़ला परिचित छैन ?[3]

وَلَيَعْلَمَنَّ اللَّهُ الَّذِينَ آمَنُوا وَلَيَعْلَمَنَّ الْمُنَافِقِينَ ⑪

(११) तथा जसले ईमान कायम गरे अल्लाह उनलाई पनि जानेर (प्रकट गरेर) रहनेछ तथा द्वयवादीहरुलाई पनि जानेर (प्रकट गरेर) रहनेछ ।[4]

हुन्छ । परिणामस्वरुप उनीहरु ईमानबाट मुख फर्काउन्छन् तथा सर्वधारणको धर्म धारण गर्दछन् ।

[1]अर्थात् मुसलमानहरुलाई विजय तथा प्रभुत्व प्राप्त होस् ।

[2]अर्थात् तिम्रा धार्मिक भाई हुन् । यो त्यही विषय हो जो अन्य स्थानमा यसप्रकार वर्णित गरिएको छ कि ती मानिसहरु तिमीलाई हेरिरहन्छन्, यदि तिमीलाई अल्लाहको तर्फबाट विजय प्राप्त हुन्छ त भन्दछन् कि हामी तिम्रो साथमा थिएनौं, तथा यदि परिस्थितिहरु काफ़िरहरुको पक्षमा हुन्छन् त (काफ़िरहरुसित गएर भन्दछन्) कि के हामीले तिमीलाई घेरेका थिएनौ तथा मुसलमानहरुबाट तिमीलाई बचाएका थिएनौं । (सूर: अन्-निसा-१४१)

[3]अर्थात् के अल्लाह ती कुरालाई जान्दैन जो तिम्रा हृदयमा छन् तथा तिम्रा अन्त: करणहरुमा लुकेका छन् यद्यपि मुखले मुसलमानहरुका साथी हुनुका कुरा गर्दछौ ।

[4]यसको अर्थ हो कि अल्लाह तआ़लाले सुख तथा कष्ट दिएर परीक्षा लिनेछ ताकि अवसरवादी एवं ईमान भएकाहरुमा अन्तर स्पष्ट हुनजाओस् । जो दुबै परिस्थितिहरुमा अल्लाहको आज्ञाको पालन गर्नेछ, त्यो ईमानवाला हो तथा जो केवल प्रसन्नता तथा सुखमा आज्ञापालन गर्नेछ त यसको अर्थ यो हो कि त्यो केवल आफ्नो स्वार्थ सिद्धिको अधीन छ, अल्लाहको होइन । जुनप्रकारले अन्य स्थानमा आदेश गऱ्यो :

﴿ وَلَنَبْلُوَنَّكُمْ حَتَّىٰ نَعْلَمَ الْمُجَاهِدِينَ مِنكُمْ وَالصَّابِرِينَ وَنَبْلُوَ أَخْبَارَكُمْ ﴾

"हामीले तिम्रो अवश्य परीक्षा लिनेछौं ताकि हामी जानीहालौं कि तिमीमध्ये सहनशील, धर्मयोद्धा एवं धैर्यवान को छ तथा तिम्रा अन्य परिस्थितिहरु पनि जाँच्नेछौं ।" (सूर: मोहम्मद-३१)

ओहुदका युद्धका पश्चात जसमा मुसलमान जाँच तथा परीक्षाको संकटबाट गुजार्नु परेको थियो, आदेश गऱ्यो :

وَقَالَ الَّذِينَ كَفَرُوا لِلَّذِينَ آمَنُوا اتَّبِعُوا سَبِيلَنَا وَلْنَحْمِلْ خَطَايَاكُمْ وَمَا هُم بِحَامِلِينَ مِنْ خَطَايَاهُم مِّن شَيْءٍ ۖ إِنَّهُمْ لَكَاذِبُونَ ﴿١٢﴾

(१२) तथा काफिरहरुले ईमान भएकाहरुसित भने कि तिमी हाम्रो मार्गको अनुसरण गर तिम्रा पाप (को बोझ) हामी उठाइहाल्नेछौं,[1] जबकि उनी तिनीहरुको पापमध्ये केही पनि उठाउनेवाला थिएनन्, यिनी त केवल झूठा छन् ।[2]

وَلَيَحْمِلُنَّ أَثْقَالَهُمْ وَأَثْقَالًا مَّعَ أَثْقَالِهِمْ ۖ وَلَيُسْأَلُنَّ يَوْمَ الْقِيَامَةِ عَمَّا كَانُوا يَفْتَرُونَ ﴿١٣﴾

(१३) हो, यिनीहरु आफ्ना बोझ अवश्य उठाउनेछन् तथा आफ्ना बोझहरुका साथ अन्य बोझ पनि,[3] तथा जे-जति झूठ रचिराखेका छन् ती सबै उनीहरुसित सोधपूछ हुनेछ ।

﴿ مَّا كَانَ اللَّهُ لِيَذَرَ الْمُؤْمِنِينَ عَلَىٰ مَا أَنتُمْ عَلَيْهِ حَتَّىٰ يَمِيزَ الْخَبِيثَ مِنَ الطَّيِّبِ ﴾

"अल्लाह तआला यस्तो छैन कि ईमानवालाहरुलाई त्यस अवस्थामा छाडिदेओस् जसमा तिमी छौ, यहाँसम्मकि त्यो अपवित्रलाई पवित्रबाट अलग गरिदिन्छ ।" (सूरः आले-इमरान १७९)

[1]अर्थात् तिमी त्यसै पूर्वहरुका धर्मतिर फर्किजाउ जसमा हामी अहिलेसम्म दृढ छौं, यसकारण कि त्यही धर्म सत्य छ । यदि यस प्रचलित धर्मका अनुसार कर्म गर्नबाट तिमी पापी हुनेछौ भने हामी त्यसका उत्तरदायी छौं, त्यो बोझ हामी आफ्ना काँधमा उठाउनेछौं ।

[2]अल्लाह तआलाले भन्नुभयो कि यिनीहरु झूठा हुन् । केयामतका दिन त यस्तो हुनेछ कि त्यहाँ कोही कसैको बोझ उठाउने छैन । ﴿ وَلَا تَزِرُ وَازِرَةٌ وِزْرَ أُخْرَىٰ ﴾ "कुनै भारी उठाउनेवालाले कसको भारी उठाउने छैन ।" त्यहाँ त एक मित्र अर्को मित्रलाई वास्ता गर्नेछैन चाहे उनका बीच अत्यन्त घनिष्टता नै किन नहोस् ।

﴿ وَلَا يَسْأَلُ حَمِيمٌ حَمِيمًا ﴾

"कुनै मित्रले आफ्नो मित्रलाई सोध्ने छैन ।" (सूरः अल-मआरिज-१०)

﴿ وَإِن تَدْعُ مُثْقَلَةٌ إِلَىٰ حِمْلِهَا لَا يُحْمَلْ مِنْهُ شَيْءٌ وَلَوْ كَانَ ذَا قُرْبَىٰ ﴾ (सूरः फातिर-१८)

[3]अर्थात् यी कुफ्रका अगुवा तथा अधर्मका प्रचारक आफ्नै बोझ उठाउने छैनन्, बरु ती मानिसहरुका पापहरुको बोझ पनि तिनीमाथि हुनेछ जो उनका प्रयत्नहरुका कारण पथभ्रष्ट भएका थिए । यो विषय सूरः अल-नहल-२५ मा पनि गुज्रिसकेको छ । हदीसमा छ, जो मार्गदर्शनतिर आमन्त्रित गर्दछ, त्यसको लागि आफ्ना पुण्यहरुको अतिरिक्त ती मानिसहरुका पुण्यको पनि प्रतिफल प्राप्त हुनेछ जो त्यसको कारण केयामतसम्म सन्मार्गको अनुसरण गर्नेछन्, यस बिना कि उनको प्रतिकारमा कुनै कमी होस्, तथा जो पथभ्रष्टताका प्रचारक हुनेछ, त्यसको लागि आफ्ना पापहरुका अतिरिक्त ती मानिसहरुका पापको पनि बोझ हुनेछ जो केयामतसम्म त्यसका कारण पथभ्रष्टताको मार्ग अपनाउने हुनेछन्, यसबिना कि उनका पापहरुमा कुनै कमी होस् । (अबू दाऊद किताबुल सुन्नः बाबु लुजुमिस सुन्नः, इब्ने माजा अल-मोकद्दमः बाबु मन् सन्न सुन्नतन हसनतन औ सय्येअतन) यसै नियमका आधारमा केयामतसम्म

عَمَّا كَانُوا يَفْتَرُونَ ⑬

झूठ रचिराखेका छन् ती सबै उनीहरुसित सोधपूछ हुनेछ ।

وَلَقَدْ أَرْسَلْنَا نُوحًا إِلَىٰ قَوْمِهِ فَلَبِثَ فِيهِمْ أَلْفَ سَنَةٍ إِلَّا خَمْسِينَ عَامًا فَأَخَذَهُمُ الطُّوفَانُ وَهُمْ ظَالِمُونَ ⑭

(१४) तथा हामीले नूह (अलैहिस्सलाम) लाई उनका समुदायतिर पठायौं, उनी तिनीहरुबीच साढे नौं सय वर्षसम्म रहे ।[1] त्यस पश्चात उनीहरुलाई तूफ़ानले आई समात्यो तथा उनी थिए पनि अत्याचारी ।

فَأَنجَيْنَاهُ وَأَصْحَابَ السَّفِينَةِ وَجَعَلْنَاهَا آيَةً لِّلْعَالَمِينَ ⑮

(१५) अनि हामीले उनलाई तथा डुङ्गामा भएकालाई मुक्ति दियौं तथा हामीले यस घटनालाई सम्पूर्ण संसारका लागि शिक्षाको संकेत बनाइदियौं ।

وَإِبْرَاهِيمَ إِذْ قَالَ لِقَوْمِهِ اعْبُدُوا اللَّهَ وَاتَّقُوهُ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ تَعْلَمُونَ ⑯

(१६) तथा इब्राहीम (अलैहिस्सलाम) ले पनि आफ्नो समुदायसित भने कि अल्लाह (तआला) को इबादत गर तथा उसित तर्सँदै गर, यदिं तिमीमा बुद्धि छ भने यही तिम्रो लागि ठीक छ ।

إِنَّمَا تَعْبُدُونَ مِن دُونِ اللَّهِ أَوْثَانًا وَتَخْلُقُونَ إِفْكًا ۚ إِنَّ الَّذِينَ

(१७) तिमी त अल्लाह तआलाका अतिरिक्त मूर्तिहरुको पूजापाठ गरिरहेका छौ, तथा झूठा कुरा आफ्नै मनले रच्ने गर्दछौ ।[2] (सुन !) ज-जसको

---

अत्याचारले हत्या गरिइएका रक्तको पाप आदमका प्रथम पुत्र (क़ाबील) माथि हुनेछ, यसकारण कि सर्वप्रथम उसैले अनर्थ हत्या गरेको थियो । (मुसनद अहमद भाग १ पृष्ठ ३८३ वक़्द अख़रजहुल जमाअ: सवा अबी दाऊद मिनतुरुक)

[1]कुर्आनका शब्दहरुबाट ज्ञात हुन्छ कि यो उनका आमन्त्रण तथा प्रचार-प्रसारको आयु हो । उनको पूरा आयु कति थियो, त्यसलाई स्पष्ट गरिएन । केही ज्ञाताहरु भन्छन् कि चालीस वर्ष नबूअतभन्दा पूर्व तथा साठी वर्ष तूफानका पश्चात यसमा सम्मिलित गरियून् ।अन्य पनि कैयन् कथन छन् ।والله أعلم بالصواب

[2]أوثان बहुवचन हो وَثَن को, जसरी أصنام बहुवचन हो صَنَم को । दुबैको अर्थ मूर्ति हो । केही ज्ञाताहरु भन्दछन्, صنم (सनम) सुन, चाँदी, पित्तल तथा पत्थरको मूर्तिलाई तथा وَثَن मूर्तिलाई पनि तथा चूनाको पत्थर आदिबाट बनाइएका स्थानहरुलाई पनि भन्दछन् । تَخْلُقُونَ إِفْكًا को एक अर्थ हो تكذبون كذبًا जस्तो कि मूल पंक्तिको अनुवादबाट स्पष्ट छ । दोस्रो अर्थ हो تعملونها و تنحتونها للإفك झूठा उद्देश्यका लागि उनलाई निर्मित गर्दछौ तथा गढ्छौ । भावार्थका अनुसार दुबै अर्थ ठीक छन् । अर्थात् अल्लाहलाई छाडेर तिमी जुन मूर्तिहरुको पूजा गर्दछौ,

تَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ لَا يَمْلِكُوْنَ لَكُمْ رِزْقًا فَابْتَغُوْا عِنْدَ اللّٰهِ الرِّزْقَ وَاعْبُدُوْهُ وَاشْكُرُوْا لَهٗ ؕ اِلَيْهِ تُرْجَعُوْنَ ﴿١٧﴾

(तिमी अल्लाह (तआला) का अतिरिक्त पूजा-पाठ गर्दैरहेका छौ, उनीहरु त तिम्रो जीविकाका स्वामी होइनन्,अत: तिमी अल्लाह तआलासित नै जीविका माँग तथा उसैको इबादत गर एवं उसैको कृतज्ञता व्यक्त गर,[१] तथा उसैतिर तिमी फर्काइनेछौ ।[२]

وَاِنْ تُكَذِّبُوْا فَقَدْ كَذَّبَ اُمَمٌ مِّنْ قَبْلِكُمْ ؕ وَمَا عَلَى الرَّسُوْلِ اِلَّا الْبَلٰغُ الْمُبِيْنُ ﴿١٨﴾

(१८) तथा यदि तिमी झुठ्लाउँछौ त तिमीभन्दा पूर्वका समुदायले पनि झुठ्लाएका छन्,[३] तथा रसूलको कर्तव्य त मात्र स्पष्टरुपमा पुऱ्याइदिनु नै हो ।[४]

ती पत्थरबाट बनाइएका हुन्, तिनीहरु सुन्न पनि सक्दैनन् न देख्न सक्छन्, न हानि पुऱ्याउन सक्छन् न लाभ । आफ्नै मनले तिमीले निर्मित गरेका हौ, उनको सत्यताको कुनै प्रमाण तिमीसित छैन। अथवा यी मूर्तिहरु ती हुन् जसलाई तिमी आफ्नै हातले निर्मित गर्दछौ तथा जब उनमा विशेष रुप तथा आकार आउँछ त तिमी ठान्दछौ कि यिनीहरुमा ईश्वरीय अधिकार आइहालेका छन् तथा उनीसित तिमी आशान्वित भई उनलाई कष्टनिवारक तथा संकटमोचन भन्दछौ ।

[१]अर्थात् जब यी मूर्तिहरु तिम्रो जीविका उपार्जनका साधनहरुमध्ये कसैको पनि स्वामी होइनन्, न वर्षा गर्न सक्दछन्, न धर्तीमा वृक्ष उमार्न सक्दछन् तथा न सूर्यको ताप प्रदान गर्न सक्दछन् तथा न तिमीलाई त्यो शक्ति प्रदान गर्न सक्दछन् कि जसलाई तिमी प्रयोग गरी प्रकृतिको यी वस्तुहरुबाट लाभान्वित हुन्छौ, त तिमी जीविका अल्लाहबाटै माँग, उसैको उपासना (इबादत) तथा उसैको कृतज्ञता व्यक्त गर ।

[२]मरेर तथा पुन: जीवित भई जब उसैतिर फर्कनुछ, उसैको सदनमा उपस्थित हुनुछ त उसलाई छोडी तिमी अरुहरुका द्वारमा आफ्नो मस्तक किन निहुराउँछौ ? त्यसका अतिरिक्त अरुहरुको इबादत किन गर्दछौ, अरुहरुलाई आवश्यकता पूर्ति गर्ने तथा कष्टनिवारक किन ठान्दछौ ?

[३]यो आदरणीय इब्राहीम अलैहिस्सलामको पनि कथन हुनसक्छ, जुन उनले आफ्नो समुदायसित भनेका थिए। अथवा अल्लाह तआलाको कथन हो, जसमा मक्कावासीहरुलाई सम्बोधन छ तथा यसमा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिइराखिएको छ कि यदि मक्काका काफिर तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई झुठ्लाइराखेका छन् भने यसबाट घबराउनुको कुनै आवश्यकता छैन । पैगम्बरहरुसँग यो हुँदै आएको छ। पूर्वका समुदाय पनि रसूललाई झुठ्लाउँथे तथा त्यसको परिणाम पनि विनाश एवं विध्वंसको रुपमा भोग्दै आएका छन् ।

[४]यसकारण तपाईं पनि प्रचार-प्रसारको कार्य गर्दै रहनुस् । त्यसबाट कोही मार्ग पाउँछ अथवा पाउँदैन ।

أَوَلَمْ يَرَوْا كَيْفَ يُبْدِئُ اللَّهُ الْخَلْقَ ثُمَّ يُعِيدُهُۥٓ ۚ إِنَّ ذَٰلِكَ عَلَى اللَّهِ يَسِيرٌ ﴿١٩﴾

(१९) के उनीहरुले देखेनन् कि सृष्टिको उत्पत्ति कुन प्रकार अल्लाहले गऱ्यो अनि अल्लाहले त्यसलाई फर्काउनेछ,[1] यो त अल्लाहका लागि अत्यन्त सरल छ ।[2]

قُلْ سِيرُوا فِي الْأَرْضِ فَانظُرُوا كَيْفَ بَدَأَ الْخَلْقَ ۚ ثُمَّ اللَّهُ يُنشِئُ النَّشْأَةَ الْآخِرَةَ ۚ إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٢٠﴾

(२०) भनिदिनुस् कि धर्तीमा हिंड्डुल गरी हेर त[3] कि कुन प्रकारले अल्लाह (तआ़ला) ले प्रथमतः सृष्टिको उत्पत्ति गऱ्यो अनि अल्लाह तआ़लाले नै अर्को नयाँ उत्पत्ति गर्नेछ । अल्लाह तआ़ला प्रत्येक कुरोमा सामर्थ्यवान छ ।

يُعَذِّبُ مَن يَشَاءُ وَيَرْحَمُ مَن يَشَاءُ ۖ وَإِلَيْهِ تُقْلَبُونَ ﴿٢١﴾

(२१) जसलाई चाहन्छ यातना दिन्छ, जसमाथि चाहन्छ दया गर्दछ, सबै उसैतिर फर्काइनेछौ ।[4]

---

यसको उत्तरदायी तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) होइन, न तपाईं सल्लल्लाहु अलैहि वसल्लमसित यस विषयमा सोधिने नै छ, किनकि सन्मार्ग प्रदान गर्नु अथवा नगर्नु यो अल्लाहको अधिकारमा छ, जो आफ्ना नियमानुसार जसमा प्रकाश प्राप्त गर्ने सत्य माँग देख्दछ, त्यसलाई मार्गदर्शन प्रदान गर्दछ, अरुहरुलाई पथ-भ्रष्टताको अन्धकारमा विचलित छाडिदिन्छ ।

[1]एकेश्वरवाद तथा रिसालतका पक्षलाई सिद्ध गर्नुका पश्चात यहाँबाट आख़िरतको विषयमा वर्णन गरिँदैछ, जसलाई काफ़िर अस्वीकार गर्दथे । भन्यो कि प्रथम पटक जन्म दिने पनि त्यही हो जब तिम्रो मूलदेखि अस्तित्व नै थिएन, अनि तिमी देख्ने, सुन्ने तथा बुझ्ने भयौ । अनि जब मृत्यु भई माटोमा मिसिनेछौ, देख्नमा तिम्रो नाम वा चिन्हसम्म रहने छैन, अल्लाह तआ़लाले तिमीलाई पुनः जीवित गर्नेछ ।

[2]अर्थात् यो कुरा तिमीलाई चाहे जति कठिन लागोस् अल्लाहका लागि अत्यन्त सरल छ ।

[3]अर्थात् विश्वमा फैलिएको अल्लाहका निशानीहरु हेर धर्तीमाथि ध्यान देउ, कुन प्रकार त्यसलाई ओछ्यायो ? त्यसमा पर्वत, घाटीहरु, नदीहरु तथा समुद्र बनाए । त्यसैबाट विभिन्न प्रकारका जीविका तथा फल उत्पन्न गऱ्यो । के यी सबै वस्तुहरु यस कुराका प्रमाण होइनन् कि उनलाई उत्पन्न गरिएको हो तथा उनका कोही स्रष्टा छ?

[4]अर्थात् त्यही मूल स्वामी तथा अधिकार भएको हो, त्यससित कोही सोध्न सक्दैन । तैपनि त्यसको यातना तथा कृपा यसै आलस्य हुनेछैन । बरु ती नियमहरुका आधारमा हुनेछ जो उसले त्यसका लागि निर्धारित गरेको छ ।

وَمَآ أَنتُم بِمُعۡجِزِينَ فِى ٱلۡأَرۡضِ وَلَا فِى ٱلسَّمَآءِۖ وَمَا لَكُم مِّن دُونِ ٱللَّهِ مِن وَلِىّٖ وَلَا نَصِيرٍ



**(२२) तिमीहरु अल्लाहलाई विवश पार्न सक्दैनौ न धर्तिमा न आकाशमा, अल्लाह बाहेक कोही तिम्रो मददगार र सहयोगी मित्र छैनन् ।**

وَٱلَّذِينَ كَفَرُواْ بِـَٔايَٰتِ ٱللَّهِ وَلِقَآئِهِۦٓ أُوْلَٰٓئِكَ يَئِسُواْ مِن رَّحۡمَتِى وَأُوْلَٰٓئِكَ لَهُمۡ عَذَابٌ أَلِيمٞ



**(२३) जुन मानिसहरु अल्लाहका आयात र अल्लाह सँगको भेट (प्रलोक) लाई बिर्सिदिन्छन् उनीहरु मेरो दायाँबाट नाउम्मीद (निराश) होउन्[1], तिनीहरूको लागि दु:खदायी यातना रहेको छ ।**

1. अल्लाहको दया र करूणामय प्रेम यस संसारमा सधरणतया सबैको लागि सर्वोपरि रहेको छ, जसमा अविश्वासी आवज्ञाकारी वा आस्थावान मुस्लिम, कपटी वा शुद्ध मनवाला र असल व्यक्ति वा पापी ब्यात्की सबै एकै सरह फाइदा प्राप्त गरिरहेका छन् । अल्लाह तआला सबैलाई संसारको सम्पूर्ण साधनहरु धनसम्पत्ति र मोजमस्तीका सरसमान प्रदान गरिरहेका छन् यो ईश्वरीय त्यो दया र प्रेम हो जसलाई अल्लाहले कुरआनको एकठाउँमा भनेका छन् "तिम्रा पालनकर्ताले दयालाई आफ्नो लागि अनिवार्य गरेका छन् र मेरो दयाले सम्पूर्ण कुरालाई आफ्नो घेरामा लिइएको छ । (अल्- अन्आम :१२, ५४) तर प्रलोकमा जबकि त्यो दिन पुण्य र पाप कर्मको फैसला र इनामको दिन हुनेछ, मानिसले संसारमा जस्तो कर्मको खेती गरेको हुनेछ त्यस्तै बदला पाउनेछ । अल्लाहको अदालतमा स्पष्ट फैसला हुनेछ । संसारमा जस्तै यदि प्रलोकमा पनि पापी र सज्जनको साथमा एकै सरह व्यवहार गरिन्छ वा दुबै जना बराबर इश्वरीय दयाको भागिदार हुन्छन् भने एकातर्फ अल्लाह निसाफ र दिएको बदला प्रति प्रश्नवाचक चिन्ह उठ्न जान्छ भने अर्कोतर्फ प्रलोकको दिन उद्देश्य नै समाप्त हुनु जान्छ कयामत अर्थात् प्रलोकको दिन अल्लाहले स्थापना गर्ने नै छन कि पुण्यकर्म कर्णलाई उचित बाला दिँदै स्वर्ग प्रदान गरियोस् र पाप कर्म गर्नेलाई पनि उचित बदलालिंदै नर्कमा होमियोस् अत: त्यसकारण त्यो दिन अल्लाहको दया प्रेम असल कर्म गर्ने मात्र अस्थावानहरु को निम्ति विशेष हुनेछ । जसरी यहाँ पनि भनिएको छ कि जुन व्यक्तिहरू अल्लाहका आयातहरू र उनी सित हुने साक्षात कारलाई इन्कार (झुठा ठहर) गरे त्यस्ता व्यक्तिहरु नै अल्लाहको दयाबाट निराश भए अर्थात् उनीहरूको हिस्सामा अल्लाहको दया र प्रेम त्यो हुनेछैन सुरह आअराफमा यसले यसरी उल्लेख गरिएको छ: "तथा हामीहरूको नाममा यस संसारमा पनि भलाई (पुण्य) लेखिदेउ तथा परलोकमा पनि हामी तिमीतिरै ध्यान केन्द्रित गर्दछौं । अल्लाह (तआला) भन्दछ कि म आफ्नो प्रकोप उसैमाथि घटित गर्दछु जसमाथि चाहन्छु । तथा मेरो कृपाको परिधिमा प्रत्येक वस्तु छ । तसर्थ त्यो कृपा उनीहरूको नाममा अवश्य लेख्नेछु जो अल्लाहसित तर्सन्छन् तथा ज़कात (धर्मदान) दिन्छन् तथा जो हाम्रा आयतहरू प्रति विश्वास गर्दछन् ।" (अल्-आराफ : १५६)

فَمَا كَانَ جَوَابَ قَوْمِهِۦٓ إِلَّآ أَن قَالُوا۟ ٱقْتُلُوهُ أَوْ حَرِّقُوهُ فَأَنجَىٰهُ ٱللَّهُ مِنَ ٱلنَّارِ ۚ إِنَّ فِى ذَٰلِكَ لَـَٔايَـٰتٍ لِّقَوْمٍ يُؤْمِنُونَ ﴿٢٤﴾

(२४) उनका समुदायको उत्तर यसको अतिरिक्त केही थिएन कि भन्नथाले यसलाई मारिहाल अथवा यसलाई पोलिहाल ।[1] अन्ततः अल्लाह (तआ़ला) ले उनलाई आगोबाट बचाइहाल्यो,[2] यसमा ईमान भएकाहरुका लागि धेरै निशानीहरु छन् ।

وَقَالَ إِنَّمَا ٱتَّخَذْتُم مِّن دُونِ ٱللَّهِ أَوْثَـٰنًا مَّوَدَّةَ بَيْنِكُمْ فِى ٱلْحَيَوٰةِ ٱلدُّنْيَا ۖ ثُمَّ يَوْمَ ٱلْقِيَـٰمَةِ يَكْفُرُ بَعْضُكُم بِبَعْضٍ وَيَلْعَنُ بَعْضُكُم بَعْضًا وَمَأْوَىٰكُمُ ٱلنَّارُ وَمَا لَكُم مِّن نَّـٰصِرِينَ ﴿٢٥﴾

(२५) (आदरणीय इब्राहीम अलैहिस्सलाम) भने कि तिमीले जुन मूर्तिहरु (देवताहरु) को पूजा अल्लाहका अतिरिक्त गरेका छौ, उनीहरुलाई तिमीले आफ्ना सांसारिक मित्रताका कारण बनाएका छौ ।[3] तिमी सबै कियामतका दिन एक-अर्काबाट इन्कार गर्नेछौ एवं एक-अर्कालाई धिक्कार्न थाल्नेछौ,[4] तथा तिमी सबैको वासस्थान नरकमा हुनेछ तथा तिमीलाई सहायता गर्ने कोही हुनेछैन ।

[1]यी आयतहरु भन्दा पूर्व आदरणीय इब्राहीम अलैहिस्सलामको कथाको वर्णन भइराखेको छ । अब पुनः त्यसको शेष भाग वर्णन गरिदैछ, मध्येमा प्रसांगिक रुपमा अल्लाह एक हुने कुरो तथा त्यसका सामर्थ्य एवं शक्तिको वर्णन गरिएको छ । केही ज्ञाताहरु भन्दछन् कि यो सबै आदरणीय इब्राहीमका भाषणको भाग हो, जसमा उनले एकेश्वरवाद तथा परलोकलाई सिद्ध गर्नका निम्ति तर्क प्रस्तुत गरेका छन्, जसका कुनै उत्तर जब उनका समुदायका मानिसहरुबाट आएन त उनले यसको उत्तर अत्याचार तथा आतङ्कवादी गतिविधिहरुबाट दिए, जसको वर्णन यस आयतमा छ कि यसको वध गर अथवा पोलिदेउ । अतः उनीहरुले आगोको एउटा ठूलो खाल्डो तयार गरी आदरणीय इब्राहीम अलैहिस्सलामलाई ठूला-ठूला पत्थर फ्याँकिने यन्त्रद्वारा त्यसमा फ्याँकिदिए ।

[2]अर्थात् अल्लाहले त्यस आगोलाई फूलवारीका रुपमा परिवर्तित गरी आफ्ना भक्त इब्राहीमलाई अल्लाहले बचाए, जस्तो कि सूरः अम्बियामा वर्णित भयो ।

[3]अर्थात् यी तिम्रा सामुदायिक मूर्तिहरु हुन् जो तिम्रा एकता तथा आपसका मित्रताका आधार हुन् । यदि तिमी यिनका पूजा छाडिदिन्छौ भने त तिम्रा समाज तथा मित्रताका श्रृङ्खला टुट्नेछन् ।

[4]अर्थात् कियामतका दिन तिमी एक-अर्काका खण्डन तथा मित्रताको साटो एक-अर्कालाई धिक्कार्नेछौ । भक्त देवतालाई धिक्कार्नेछ तथा देवता, भक्तसित घृणाको प्रदर्शन गर्नेछ ।

فَاٰمَنَ لَهٗ لُوْطٌ ۘ وَقَالَ اِنِّيْ مُهَاجِرٌ اِلٰى رَبِّيْ ؕ اِنَّهٗ هُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿٢٦﴾

(२६) त त्यस (आदरणीय इब्राहीम अलैहिस्सलाममाथि) (आदरणीय) लूत (अलैहिस्सलाम) ले ईमान स्वीकार गरे,[1] तथा भने कि म आफ्ना प्रभुतिर स्थानान्तरण गर्दछु ।[2] त्यो अत्यन्त प्रभावशाली एवं दूरदर्शी छ ।

وَوَهَبْنَا لَهٗۤ اِسْحٰقَ وَيَعْقُوْبَ وَجَعَلْنَا فِيْ ذُرِّيَّتِهِ النُّبُوَّةَ وَالْكِتٰبَ وَاٰتَيْنٰهُ اَجْرَهٗ فِي الدُّنْيَا ۚ وَاِنَّهٗ فِي الْاٰخِرَةِ لَمِنَ الصّٰلِحِيْنَ ﴿٢٧﴾

(२७) तथा हामीले उसलाई (इब्राहीमलाई) इसहाक तथा याकूब प्रदान गऱ्यौं तथा हामीले नबूअत तथा किताब उनका सन्तानमा नै पारिदियौं[3] तथा हामीले संसारमा पनि त्यसलाई पुण्य (प्रतिफल) दियौं,[4] तथा परलोकमा त त्यो सदाचारीहरुमध्ये हुनेछ ।[5]

[1]आदरणीय लूत, आदरणीय इब्राहीम अलैहिस्सलामका भाइका पुत्र थिए, यिनले आदरणीय इब्राहीममाथि ईमान स्वीकार गरे । तत्पश्चात उनलाई पनि 'सदूम' का क्षेत्रमा नबी बनाएर पठाइयो ।

[2]यो आदरणीय इब्राहीमले भने तथा केही विद्वानका निकट आदरणीय लूतले तथा केही भन्दछन् कि दुबैले हिज़रत (स्थानान्तरण) गरे । अर्थात जब इब्राहीम तथा उनीमाथि ईमान स्वीकार गर्नेहरुका लागि आफ्नो क्षेत्र 'कोसा' मा जो 'हर्रान' तिर जाँदा 'कूफ़े' को एउटा बस्ती थियो, अल्लाहको इबादत गर्न कठिन भयो त त्यहाँबाट हिज़रत गरी सीरियाका क्षेत्रमा गइहाले । तेस्रो, उनका साथ आदरणीय इब्राहीमकी पत्नी 'सारह' थिइन् ।

[3]अर्थात् आदरणीय इसहाकबाट याकूब भए, जसबाट इस्राईलको सन्तानको वंश चल्यो तथा तिनै मध्येबाट सारा नबी भए तथा किताबहरु आए । अन्तमा परम आदरणीय नबी करीम सल्लल्लाहु अलैहि वसल्लम आदरणीय इब्राहीमका दोस्रा पुत्र आदरणीय इस्माईलका वंशमा नबी भए तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लम माथि कुर्‌आन अवतरित भयो ।

[4]यस प्रतिफलसित तात्पर्य सांसारिक जीविका पनि हो तथा शुभ चर्चा (प्रशंसा) । अर्थात संसारमा प्रत्येक धर्मका मानिसहरु (इसाई, यहूदी आदि यहाँसम्मकि मूर्तिपूजक पनि) आदरणीय इब्राहीमको आदर तथा सम्मान गर्दछन् तथा मुसलमान त छन् नै इब्राहीमी धर्मका अनुयायी, उनीहरुकहाँ उनी आदरणीय किन हुनेछैन ?

[5]अर्थात् आख़िरतमा पनि उनी उच्च पदहरुमा आसीन तथा सदाचारी व्यक्तिहरुका समूहमा हुनेछन् । यसै विषयलाई अन्य स्थानमा यसप्रकार वर्णन गरिएको छ :

﴿ وَاٰتَيْنٰهُ فِي الدُّنْيَا حَسَنَةً ۭ وَاِنَّهٗ فِي الْاٰخِرَةِ لَمِنَ الصّٰلِحِيْنَ ﴾

"हामीले उसलाई लोकमा पनि राम्रो कुरा दिएका छौं तथा निःसन्देह त्यो परलोकमा पनि सदाचारीहरुमध्ये हुनेछ ।" (सूरः अल-नहल-१२२)

وَلُوۡطًا اِذۡ قَالَ لِقَوۡمِهٖۤ اِنَّكُمۡ لَتَاۡتُوۡنَ الۡفَاحِشَةَ مَا سَبَقَكُمۡ بِهَا مِنۡ اَحَدٍ مِّنَ الۡعٰلَمِيۡنَ ﴿٢٨﴾

(२८) तथा (आदरणीय) लूत (अलैहिस्सलाम) को पनि (चर्चा गर) जबकि उनले आफ्ना समुदायसित भने कि तिमी त त्यस कुकर्ममा लागिसकेका छौ[1] जसलाई तिमीभन्दा पूर्व संसारभरिमा कसैले पनि गरेन ।

اَئِنَّكُمۡ لَتَاۡتُوۡنَ الرِّجَالَ وَتَقۡطَعُوۡنَ السَّبِيۡلَ ۙ وَتَاۡتُوۡنَ فِىۡ نَادِيۡكُمُ الۡمُنۡكَرَ ؕ فَمَا كَانَ جَوَابَ قَوۡمِهٖۤ

(२९) के तिमी पुरुषहरुका पास (कुकर्मका लागि) आउँछौ[2] तथा मार्ग बन्द गर्दछौ[3] तथा आफ्ना आम सभाहरुमा निर्लज्जताका कार्य गर्दछौ ?[4] त त्यसका उत्तरमा त्यसका समुदायले

[1]त्यस कुकर्मसित तात्पर्य त्यही पुरुष सम्लिन छ जसलाई लूतका समुदायका मानिसहरुले सर्वप्रथम गरे, जस्तो कि कुर्आनले स्पष्ट गरेको छ ।

[2]अर्थात् तिम्रो कामवासना यस सीमासम्म पुगिसकेको छ कि त्यसका लागि प्राकृतिक विधिहरु तिम्रा निम्ति अपर्याप्त भइसकेका छन् तथा तिमीले अप्राकृतिक विधि अप्नाइसकेका छौ । काम-इच्छाको तृप्तिका लागि प्राकृतिक रुपमा अल्लाह तआलाले पत्नीहरुसित संभोग गर्न अनुमति दिएको छ । त्यसलाई छाडेर यस कार्यका लागि पुरुषहरुको गुँदाको प्रयोग गर्नु अप्राकृतिक तथा अस्वभाविक रीति हो ।

[3]यसको एउटा अर्थ त यो गरिएको छ कि आवत-जावत गर्ने यात्री, आगन्तुक तथा गुज्रनेहरुलाई बलपूर्वक रोकेर तिमी उनीसित असभ्य कार्य गर्दछौ, जसले गर्दा मानिसहरुलाई मार्गबाट गुज्रन कठिन भइसकेको छ तथा मानिस घरहरुमा बसिरहन नै सुरक्षित ठान्छन् । दोस्रो अर्थ यो हो कि तिमी आवत-जावत गर्नेहरुलाई लुट्छौ तथा हत्या गरिदिन्छौ अथवा उद्दण्डताले उनलाई ढुङ्गा हान्दछौ । तेस्रो अर्थ यो गरिएको छ कि मार्गमा नै अभद्र व्यवहार गर्दछौ जसले गर्दा त्यहाँबाट आवत-जावत गर्नेहरुलाई लज्जा हुन्छ । यी सबै परिस्थितिहरुमा मार्ग बन्द हुन्छन् । इमाम शौकानी भन्नुहुन्छ कि कुनै एक कारणको निर्धारिण त कठिन छ, तैपनि उनीहरु कुनै यस्ता कार्य अवश्य गर्दथे जसबाट क्रियात्मक रुपले मार्ग अवरुद्ध हुन्थ्यो । मार्ग अवरुद्ध गर्नुको एक अर्थ वंशको अवरोध पनि गरिएको छ । अर्थात स्त्रीहरुका गुप्ताङ्ग (योनि) को प्रयोगका साटो पुरुषहरुका गुदाका प्रयोग गरी तिमी आफ्ना वंशलाई अवरुद्ध गर्नुमा लागेका छौ । (फ़तहुल क़दीर)

[4]यो असभ्यता (निर्लज्जता) के थियो, त्यसमा पनि विभिन्न कथन छन्, जस्तै मानिसहरुलाई ढुङ्गाले हान्नु, आगन्तुक यात्रीको उपहास तथा अवहेलना गर्नु, सभाहरुमा वायु निकाल्नु, एक-अर्काका समक्ष बाल संभोग गर्नु, शतरंज आदि प्रकारका नराम्रा कुराहरु, रंगीन वस्त्र

إِلَّآ أَن قَالُوا ائْتِنَا بِعَذَابِ اللَّهِ إِن كُنتَ مِنَ الصَّادِقِينَ ﴿٢٩﴾

ले त्यसका अतिरिक्त केही भनेन[1] कि गइहाल, यदि तिमी साँचो छौ भने हाम्रो पास अल्लाहको प्रकोप ल्याउ ।

قَالَ رَبِّ انصُرْنِي عَلَى الْقَوْمِ الْمُفْسِدِينَ ﴿٣٠﴾

(३०) (आदरणीय) लूत (अलैहिस्सलाम) ले प्रार्थना गरे[2] कि प्रभु ! यस उपद्रवी समुदायमाथि मेरो सहायता गर ।

وَلَمَّا جَاءَتْ رُسُلُنَا إِبْرَاهِيمَ بِالْبُشْرَىٰ قَالُوا إِنَّا مُهْلِكُو أَهْلِ هَٰذِهِ الْقَرْيَةِ ۖ إِنَّ أَهْلَهَا كَانُوا ظَالِمِينَ ﴿٣١﴾

(३१) तथा जब हामीद्वारा पठाइएका फरिश्ताहरु (आदरणीय) इब्राहीम (अलैहिस्सलाम) का पास शुभ-सूचना लिएर पुगे, त भने कि हामी यस वस्तीवालाहरुलाई नाश गर्नेछौं ।[3] निःसन्देह यहाँका निवासी पापी छन् ।

قَالَ إِنَّ فِيهَا لُوطًا ۚ قَالُوا نَحْنُ أَعْلَمُ بِمَن فِيهَا ۖ لَنُنَجِّيَنَّهُ وَأَهْلَهُ إِلَّا امْرَأَتَهُ

(३२) (आदरणीय इब्राहीमले) भने कि त्यसमा त लूत (अलैहिस्सलाम) छन्, फरिश्ताहरुले भने कि यहाँ जो छन् हामी उनलाई राम्ररी जान्दछौं,[4] लूत तथा उसका परिवारलाई उसकी

(धारण गर्नु आदि । इमाम शौकानी भन्नुहुन्छ, "यो कुनै टाढाको कुरा होइन कि उनीहरु इशारा, कुकर्महरु गर्दैरहेका होऊन् ।"

[1]आदरणीय लूत अलैहिस्सलामले जब उनलाई यी निषेधित कर्महरुबाट रोके त त्यसका उत्तरमा भने........।

[2]अर्थात् जब आदरणीय लूत अलैहिस्सलाम समुदायलाई सुधार्नबाट निराश भए तब अल्लाहसित सहायताको दुआ (प्रार्थना) गरे.....।

[3]अर्थात् आदरणीय लूतको दुआ स्वीकार भयो तथा अल्लाहले फरिश्ताहरुलाई विनाश गर्नको लागि पठाइदियो । ती फरिश्ताहरु पहिला आदरणीय इब्राहीम अलैहिस्सलामको नजीक गए तथा उनलाई इसहाक अलैहिस्सलाम तथा याकूब अलैहिस्सलामको सम्बन्ध शुभसूचना दिए तथा साथै भने कि हामी लूत अलैहिस्सलामको वस्तीलाई नाश गर्न आएका हौं ।

[4]अर्थात् हामीलाई ज्ञात छ कि भला एवं ईमान भएका को छन् तथा उपद्रवी को ?

كَانَتْ مِنَ الْغٰبِرِيْنَ ﴿٣٢﴾

पत्नीलाई हामी बचाउनेछौं, अवश्य त्यो स्त्री पछि पर्ने मध्येको हो ।[1]

وَلَمَّآ اَنْ جَآءَتْ رُسُلُنَا لُوْطًا سِيْٓءَ بِهِمْ وَضَاقَ بِهِمْ ذَرْعًا وَّقَالُوْا لَا تَخَفْ وَلَا تَحْزَنْ اِنَّا مُنَجُّوْكَ وَاَهْلَكَ اِلَّا امْرَاَتَكَ كَانَتْ مِنَ الْغٰبِرِيْنَ ﴿٣٣﴾

(३३) तथा पछि जब हाम्रा सन्देशवाहक लूत (अलैहिस्सलाम) का नजिक पुगे त उनी उनका कारण दुखी भए तथा हृदयमा शोक गरे ।[2] सन्देशवाहकहरुले भने कि तपाईं भयभीत नहुनुस् तथा दुखी नहुनुस् हामीले तपाईंलाई तपाईंका सम्बन्धिहरु सहित सुरक्षित गर्नेछौं, परन्तु तपाईंकि पत्नी[3] की त्यो यातनाका लागि शेष रहनेहरुमध्यकी हुनेछ ।

---

[1]अर्थात् ती पछि रहनेहरु मध्येबाट जसलाई प्रकोपद्वारा नाश गर्नुछ । त्यो ईमान भएकी थिइनन् बरु आफ्ना समुदायकी पक्षधर थिई, यसकारण उसलाई पनि नाश गरियो ।

[2] سِيْٓءَ بِهِمْ को अर्थ हो "उनको पासमा यस्तो वस्तु आयो जो उनलाई नराम्रो लाग्यो तथा त्यसबाट भयभीत भए ।" यसकारण कि लूत अलैहिस्सलामले ती फरिश्ताहरुलाई जो मनुष्यका रुपमा आएका थिए, मनुष्य नै ठाने । भयभीत भए आफ्ना समुदायका दुर्व्यवहार तथा उद्दण्डताका कारण कि यी सुन्दर अतिथिहरुको आगमनको ज्ञान यदि उनलाई भयो भने उनी तिनीहरुसित बलपूर्वक अभद्र व्यवहार गर्नेछन्, जसबाट मेरो अपमान हुनेछ । ضَاقَ بِهِمْ ذَرْعًا : यो संकेत हो असमर्थसित । जस्तै ضَاقَتْ يَدُهُ (हात संकुचित हुनु) संकेत हो निर्धनतासित । अर्थात् यी सुन्दर आकर्षक अतिथिहरुलाई कुकर्मी समुदायबाट बचाउनुको कुनै साधन उनीहरुलाई समभ्रूमा आइराखेको थिएन, जसबाट उनी दुखी तथा मनै-मनमा शोकग्रस्त थिए ।

[3]फरिश्ताहरुले आदरणीय लूतको यो चिन्ता तथा शोक एवं दुख देखे त उनीहरुलाई सान्त्वना दिए तथा भने कि तपाईं कुनै प्रकारले दुखी तथा भयभीत नहुनु, हामी अल्लाहको तर्फबाट पठाइएका फरिश्ता हौं । हाम्रो उद्देश्य तपाईंलाई तथा तपाईंका परिवारका मानिसहरुलाई, तपाईंकी पत्नीबाहेक, सुरक्षा दिलाउनु हो ।

(३४) हामी यस वस्तीका मानिसहरुमाथि आकाशीय प्रकोप पार्ने भएका छौं[1] यसकारणले कि यिनीहरु उल्लंघनकारी भइराखेका छन् ।

إِنَّا مُنزِلُونَ عَلَىٰٓ أَهْلِ هَٰذِهِ ٱلْقَرْيَةِ رِجْزًا مِّنَ ٱلسَّمَآءِ بِمَا كَانُوا۟ يَفْسُقُونَ ﴿٣٤﴾

(३५) तथा हामीले यस वस्तीलाई खुला शिक्षा ग्रहण गर्नका निम्ति निशानी (लक्षण) बनायौं[2] ती मानिसहरुका लागि जो बुद्धि भएका छन् ।[3]

وَلَقَد تَّرَكْنَا مِنْهَآ ءَايَةًۢ بَيِّنَةً لِّقَوْمٍ يَعْقِلُونَ ﴿٣٥﴾

(३६) तथा मदयनतिर[4] (हामीले) उनका भाइ शोएब (अलैहिस्सलाम) लाई (पठायौं), उनले भने कि हे मेरा समुदायका मानिसहरु ! अल्लाहको

وَإِلَىٰ مَدْيَنَ أَخَاهُمْ شُعَيْبًا فَقَالَ يَٰقَوْمِ ٱعْبُدُوا۟ ٱللَّهَ وَٱرْجُوا۟

[1]यस आकाशीय प्रकोपसित तात्पर्य त्यही प्रकोप हो जसद्वारा लूतका समुदायलाई ध्वंस गरियो । भनिन्छ कि जिब्रिल अलैहिस्सलामले उनका वस्तीहरुलाई धर्तीबाट उखेलेर आकाशको उचाईसम्म लगे अनि तिनलाई उनीहरुमाथि नै पल्टाइयो । यसका पश्चात रोडा, पत्थरको वर्षा गरियो तथा त्यस स्थानलाई अति दुर्गन्धित तालमा परिवर्तित गरियो । (इब्ने कसीर)

[2]अर्थात् ढुङ्गाहरुका ती अवशेष जसको वर्षा उनीमाथि गरियो, कालो दुर्गन्धित पानी तथा पल्टिएका वस्तीहरु, यी सबै शिक्षा गर्नका लागि निशानीहरु हुन्, परन्तु कसका लागि ? बुद्धिमानीहरुका लागि ।

[3]यसकारण ती नै कुराहरुमा विचार गर्दछन्, कारण तथा कारकहरुका विश्लेषण गर्दछन् तथा परिणाम एवं लक्षण हेर्छन्, परन्तु जो मानिस बुद्धि एवं समभ्कबाट वञ्चित हुन्छन्, उनीहरुलाई यी वस्तुहरुसित के सम्बन्ध ? उनीहरु त ती पशुहरु समान छन् जसलाई वधका लागि वधशालामा ल्याइन्छ परन्तु उनीहरुलाई आभाससम्म हुँदैन । यसमा मक्काका मूर्तिपूजकहरुका लागि पनि चेतावनी छ कि उनीहरु पनि झुठ्लाउने तथा विरोधका मार्ग अपनाएर त्यसै मूर्खता एवं असतर्कता प्रदर्शन गरिराखेका छन्, जो बुद्धि एवं समभ्कबाट वञ्चित मानिसहरुको व्यवहार छ ।

[4]मदयन आदरणीय इब्राहीम अलैहिस्सलामको पुत्रको नाम थियो, केही ज्ञाताहरुका निकट यो उनको पौत्रको नाम हो, पुत्रको नाम मदयान थियो । उनैको नामले त्यस क़बीला (गोत्त) का नाम पर्न गयो, जो उनैको वंशमा सम्मिलित थियो । यसै मदयन क़बीलातिर आदरणीय शोएब अलैहिस्सलामलाई नबी बनाएर पठाइयो । केही विद्वानहरु भन्दछन् कि मदयन नगरको नाम थियो यो क़बीला अथवा नगर लूत अलैहिस्सलामको वस्तीका निकट नै थियो ।

الْيَوْمَ الْآخِرَ وَلَا تَعْثَوْا فِي الْأَرْضِ مُفْسِدِينَ ﴿٣٦﴾

इबादत (बन्दना) गर, केयामत (प्रलय) का दिनको आशा राख[1] तथा धर्तीमा उपद्रव फैलाउँदै नहिंड ।[2]

فَكَذَّبُوهُ فَأَخَذَتْهُمُ الرَّجْفَةُ فَأَصْبَحُوا فِي دَارِهِمْ جَاثِمِينَ ﴿٣٧﴾

(३७) तैपनि उनीहरुले उनलाई भुठ्लाए, अन्तमा उनीहरुलाई भूकम्पले समातिहाल्यो तथा उनीहरु आफ्ना घरहरुमा बसेकै अवस्थामा मृत भए ।[3]

وَعَادًا وَثَمُودَا وَقَد تَّبَيَّنَ لَكُم مِّن مَّسَاكِنِهِمْ وَزَيَّنَ لَهُمُ الشَّيْطَانُ أَعْمَالَهُمْ فَصَدَّهُمْ عَنِ السَّبِيلِ وَكَانُوا مُسْتَبْصِرِينَ ﴿٣٨﴾

(३८) तथा हामीले 'आदवाला' तथा 'समूदवालाहरुलाई' पनि (ध्वस्त गऱ्यौं) जसका केही भग्नावशेष तिम्रा समक्ष विद्यमान छन्,[4] तथा शैतानले उनका कुकर्महरुलाई सुसज्जित गरेर देखाएका थिए तथा उनीहरुलाई मार्गबाट रोकिदिएको थियो त्यसका उपरान्त पनि कि यिनीहरु आँखा भएका तथा चतुर थिए ।

[1]अल्लाहको इबादत पश्चात उनीहरुलाई आख़िरतको स्मरण गराइयो या त यसकारण कि उनीहरु आख़िरत (परलोक) मा विश्वास गर्दैनथे, अथवा यसकारण कि उनीहरु त्यसलाई बिर्सिसकेका थिए तथा पापहरुमा लीन थिए तथा जो समाज आख़िरतलाई बिर्सिदिन्छ, त्यो पापमा निर्भीक हुन्छ, जस्तै आजकल मुसलमानहरुको बहुमतको अवस्था छ ।

[2]नाप-तौलमा कमी तथा मानिसहरुलाई कम दिनु, यो रोग सामान्यरुपले व्याप्त थियो तथा पाप गर्नुमा पनि उनीहरुलाई भय थिएन, जसबाट धर्तीमा आतङ्क व्याप्त भएको थियो ।

[3]आदरणीय शोएब अलैहिस्सलामका कुरा एवं भाषणको उनीमाथि कुनै प्रभाव भएन । अन्त्यमा बादलहरुको छायाँ भएका दिन जिब्रीलका एक तीब्र चित्कारले धर्तीमा कम्पन उत्पन्न भयो, जसबाट उनका हृदय उफ्रेर आँखामा आइपुगे तथा उनको मृत्यु भयो । उनी घोप्टिएको अवस्थामा शेष रहे ।

[4]आदका समुदायको वस्ती अहकाफ़, हज़्रमूत (यमनको लाल सागरको तटीय भाग) का निकट तथा समूदको वस्ती हिज्र जसलाई आजकल मदायन स्वालेह भन्दछन्, हिजाज़को उत्तरमा छ । यी क्षेत्रहरुसित अरबहरुका व्यापारिक यात्राहरु हुने गर्दथे, यसकारण यी वस्तीहरु उनका लागि अपरिचित होइन बरु परिचित थिए ।

[5]अर्थात् उनीहरु बुद्धिमान तथा चतुर थिए । परन्तु धर्मका विषयमा उनीहरुले आफ्ना बुद्धि एवं समभ्कका प्रयोग गरेनन् । यसकारण यो बुद्धि एवं समभ्क उनका कुनै काम आएन ।

وَقَارُونَ وَفِرْعَوْنَ وَهَامَانَ وَلَقَدْ جَاءَهُم مُّوسَىٰ بِالْبَيِّنَاتِ فَاسْتَكْبَرُوا فِي الْأَرْضِ وَمَا كَانُوا سَابِقِينَ ﴿٣٩﴾

(३९) तथा क़ारून, फ़िरऔन तथा हामानलाई पनि, उनीहरुका पास (आदरणीय) मूसाले खुल्ला चमत्कार लिएर आएका थिए,[1] तैपनि उनीहरुले धर्तीमा घमण्ड गरे, परन्तु हामीभन्दा अगाडी बढ्नेहरु हुन सकेनन् ।[2]

فَكُلًّا أَخَذْنَا بِذَنبِهِ فَمِنْهُم مَّنْ أَرْسَلْنَا عَلَيْهِ حَاصِبًا وَمِنْهُم مَّنْ أَخَذَتْهُ الصَّيْحَةُ وَمِنْهُم مَّنْ خَسَفْنَا بِهِ الْأَرْضَ وَمِنْهُم

(४०) अनि त हामीले प्रत्येकलाई त्यसको पापको आपदामा समात्यौं,[3] तिनीहरुमध्ये केहीमाथि हामीले ढुङ्गाहरुको वर्षा गऱ्यौं,[4] उनीहरुमध्ये केहीलाई तीब्र ध्वनिले समात्यो,[5] उनीहरुमध्ये केहीलाई हामीले धर्तीमा धसाईदियौं[6] तथा

[1]अर्थात् प्रमाण एवं चमत्कारको उनीमाथि कुनै प्रभाव परेन तथा निरन्तर अहंकारी बनिरहे, अर्थात् ईमान तथा अल्लाहको भयको मार्गलाई अपनाउनबाट विमुख भए ।

[2]अर्थात् हाम्रो पकडबाट बचेर जान सकेनन् तथा हाम्रो यातनाको पकडमा आएर नै रहे । एउटा अन्य अनुवाद छ, "यिनी कुफ्रमा अघि बढ्नेहरु थिएनन्" बरु उनीभन्दा पूर्व पनि धेरै समुदाय गुज्रिसकेका छन्, जसले त्यसैप्रकार कुफ्र तथा अहङ्कारको मार्ग अपनाएका थिए ।

[3]अर्थात् यी वर्णित मध्येबाट प्रत्येकको, उनका पापहरुका कारण हामीले पकड गऱ्यौं ।

[4]यो आदका समुदाय थियो, जसमाथि अति तीब्र हावाहरुको प्रकोप आयो । यी वायुहरु धर्तीबाट ढुङ्गा उडाएर उनीमाथि वर्षाउँथे । अन्तमा उनको तीब्रता यति बढ्यो कि उनलाई उडाएर आकाशसम्म लैजान्थे तथा उनलाई उल्टो पारी बजार्थे, जसबाट उनका शिर अलग तथा शेष भाग अलग हुन्थे जस्तो कि उनीहरु खजुरका खुकुला तनाहरु जस्तो । (इब्ने कसीर) । केही व्याख्याकारहरुले حاصبا का चरितार्थ लूतको समुदायलाई भनेका छन् । परन्तु इमाम इब्ने कसीरले यसलाई सही मानेका छैनन् तथा आदरणीय इब्ने अब्बासतिर सम्बन्धित कथनको क्रमान्तर भनेका छन् ।

[5]यो आदरणीय स्वालेहको समुदाय समूद हो, जसलाई उनका भनाई अनुसार ढुङ्गाको एउटा चट्टानबाट ऊटनी निकालेर देखाइयो । परन्तु ती अत्याचारीहरुले ईमान स्वीकार गर्नुको साटो त्यस ऊटनीलाई नै मारिदिए, जसको तीन दिन पश्चात उनीमाथि तीब्र चित्कारको प्रकोप आयो, जसले उनको आवाज तथा चाललाई शान्त गरिदियो ।

[6]यो क़ारून हो जसलाई धन-द्रव्यको कोष प्रदान गरिएको थियो । परन्तु यो यस गर्वमा लिप्त भयो कि त्यो धन-धान्य यस कुराको प्रमाण हो कि म अल्लाहकहाँ सम्मानित तथा आदरणीय छु,

مَّنۡ أَغۡرَقۡنَاۚ وَمَا كَانَ ٱللَّهُ لِيَظۡلِمَهُمۡ وَلَٰكِن كَانُوٓاْ أَنفُسَهُمۡ يَظۡلِمُونَ ۝٤٠

उनीहरुमध्ये केहीलाई हामीले पानीमा डुबाइदियौं,[1] अल्लाह तआ़ला यस्तो थिएन कि उनीमाथि अत्याचार गर्दथ्यो बरु यिनीहरु नै आफ्ना प्राणहरुमाथि अत्याचार गर्दथे ।[2]

مَثَلُ ٱلَّذِينَ ٱتَّخَذُواْ مِن دُونِ ٱللَّهِ أَوۡلِيَآءَ كَمَثَلِ ٱلۡعَنكَبُوتِ ٱتَّخَذَتۡ بَيۡتٗاۖ وَإِنَّ أَوۡهَنَ ٱلۡبُيُوتِ لَبَيۡتُ ٱلۡعَنكَبُوتِۚ لَوۡ كَانُواْ يَعۡلَمُونَ ۝٤١

(४१) जसले अल्लाह (तआ़ला) का अतिरिक्त अन्यलाई कार्यक्षम (ईश्वर) निर्धारित गरेका छन्, उनको उदाहरण माकुराको समान छ कि त्यसले पनि एउटा घर बनाउँछ, यद्यपि सबै घरहरुभन्दा अधिक कमजोर घर माकुराको घर नै छ[3] काश, उनीहरु यो कुरा बुझ्थे ।

إِنَّ ٱللَّهَ يَعۡلَمُ مَا يَدۡعُونَ مِن دُونِهِۦ مِن شَيۡءٖۚ

(४२) अल्लाह (तआ़ला) ती सबै वस्तुहरुलाई जान्दछ जसलाई उनी उसका अतिरिक्त

मलाई मूसाको कुरालाई स्वीकार गर्नुको के आवश्यकता छ ? अत: उसलाई उसका कोष तथा महलहरुसहित धर्तीमा धँसाइयो ।

[1]यो फ़िरऔन हो जो मिश्र देशका राजा थिए, तर सीमा उल्लंघन गरी आफूलाई भगवान (उपास्य) घोषित गरिदियो, आदरणीय मूसामाथि ईमान स्वीकार गर्नबाट तथा उनका समुदाय इस्राईलका सन्तानलाई, जसलाई उसले दास बनाएको थियो, स्वतन्त्र गर्नबाट इन्कार गरिदियो । अन्तमा एक प्रात: उसलाई उसका सम्पूर्ण सेनासहित भूमध्यसागर (कुल्जुम) मा डुबाइयो ।

[2]अर्थात् अल्लाहको गुण होइन कि त्यसले अत्याचार गरोस् । त्यसकारण पूर्वकालीन समुदाय, त्यसमाथि प्रकोप आयो, मात्र यसकारण ध्वंस भए कि कुफ़्र एवं शिर्क तथा झुठ्लाउन एवं पाप जस्ता कर्म गरी उनीहरुले स्वयं नै आफ्ना प्राणहरुमाथि अत्याचार गरेका थिए ।

[3]अर्थात् जुनप्रकार माकुराको जाल (घर) अत्यन्त क्षीण तथा अस्थाई हुन्छ, हातको अलिकति संकेतले त्यो नष्ट हुनजान्छ, अल्लाहका अतिरिक्त अरुहरुलाई आफ्नो कार्यक्षम तथा कष्टनिवारक, ठान्नु पनि बिल्कुल त्यसै समान छ, अर्थात् सर्वथा व्यर्थ छ, किनकि उनी पनि कसैका काम आउन सक्दैन । यसकारण अल्लाहका अतिरिक्त अरुहरुका सहारा पनि माकुराका जाल सरह सर्वथा अस्थाई छन् । यदि यिनी सुदृढ तथा लाभप्रद भएको भए यी देवता पूर्वकालीन समुदायहरुलाई बचाइहाल्थे परन्तु संसारमा हेरिहाले कि तिनीहरुले उनीहरुलाई बचाउन सकेनन् ।

وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٤٢﴾

गुहारिराखे तथा त्यो अत्यन्त प्रभावशाली एवं तत्वज्ञ छ ।

وَتِلْكَ الْأَمْثَالُ نَضْرِبُهَا لِلنَّاسِ ۖ وَمَا يَعْقِلُهَا إِلَّا الْعَالِمُونَ ﴿٤٣﴾

(४३) तथा हामी यी उदाहरणहरुलाई मानिसहरुका लागि वर्णन गर्दैछौं,[1] तथा यिनीहरुलाई केवल ज्ञान भएकाले नै बुझ्न सक्दछन् ।[2]

خَلَقَ اللَّهُ السَّمَاوَاتِ وَالْأَرْضَ بِالْحَقِّ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَةً لِّلْمُؤْمِنِينَ ﴿٤٤﴾

(४४) अल्लाह तआलाले आकाशहरु तथा धर्तीलाई हित तथा सत्यका साथ सृष्टि गरेको छ,[3] ईमान भएकाहरुका लागि त यसमा बडो ठूलो निशानी (प्रमाण) छ ।[4]



[1]अर्थात् उनीहरुलाई असतर्कताका स्वप्नबाट जागृत गर्न, शिर्कको वास्तविकताबाट सचेत गर्न तथा मार्गदर्शन गर्नका लागि ।

[2]यस ज्ञानसित तात्पर्य अल्लाहको, त्यसका धार्मिक विधानहरुका तथा ती आयतहरु एवं तर्कहरुको ज्ञान हो जसमाथि विचार तथा चिन्तन-मनन गर्नाले मनुष्यलाई अल्लाहको ज्ञान प्राप्त हुन्छ तथा प्रकाशको मार्ग प्रशस्त हुन्छ ।

[3]अर्थात् व्यर्थ तथा उद्देश्यहीन होइन ।

[4]अर्थात् अल्लाहको अस्तित्व, त्यसका सामर्थ्य तथा ज्ञान एवं नीतिको तथा त्यसपछि त्यसै प्रमाणबाट उनी यस परिणाममा पुग्दछन् कि सृष्टिमा उसका अतिरिक्त कोही पूज्य छैन, कोही आवश्यकता पूर्ति गर्ने तथा संकटहारी छैन ।

اُتْلُ مَآ اُوْحِيَ اِلَيْكَ مِنَ الْكِتٰبِ وَاَقِمِ الصَّلٰوةَ ۭ اِنَّ الصَّلٰوةَ تَنْهٰى عَنِ الْفَحْشَاۗءِ وَالْمُنْكَرِ ۭ وَلَذِكْرُ اللّٰهِ اَكْبَرُ ۭ وَاللّٰهُ يَعْلَمُ مَا تَصْنَعُوْنَ ⓸⓹

(४५) जुन किताब तपाईंतिर प्रकाशना (वह्य) गरिएको छ, त्यसलाई पढ्नुस्[1] तथा नमाज़ स्थापित गर्नुस् (निश्चित रुपले पढ्नुस्) ।[2] निःसन्देह नमाज़ निर्लज्जता तथा दुराचारबाट रोक्दछ,[3] निःसन्देह अल्लाहको स्मरण निकै

[1]कुर्आन करीमका पाठका अनेक उद्देश्य छन् । मात्र प्रतिकार तथा पुण्यका लागि, त्यसका अर्थ एवं भावर्थमाथि विचार एवं चिन्तनका लागि, शिक्षा-दीक्षाका लागि तथा भाषण एवं व्याख्याका लागि, पाठका आदेशमा यी सबै प्रकार सम्मिलित छन् ।

[2]किनकि नमाज़बाट (यदि नमाज़ हो) मनुष्यको विशेषरुपले सम्बन्ध अल्लाहसित हुनजान्छ, जसबाट मनुष्यलाई अल्लाहको सहायता प्राप्त हुनजान्छ, जो जीवनका प्रत्येक मोडमा उसको दृढता एवं स्थिरताको कारण तथा मार्गदर्शनको साधन सिद्ध हुन्छ । यसैले कुर्आन करीममा भनिएको छ,

﴿ يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اسْتَعِيْنُوْا بِالصَّبْرِ وَالصَّلٰوةِ ﴾

“हे ईमान भएकाहरु ! धैर्य एवं नमाज़बाट सहायता प्राप्त गर ।” (सूरः अल-बकरः-१५३/१०३)

नमाज़ तथा धैर्य कुनै भौतिक (दृश्य) वस्तु त होइन कि मनुष्य त्यसलाई समातेर सहायता प्राप्त गरोस् । यो त अगोचर वस्तु हो । यसको अर्थ यो हो कि मनुष्यको यिनीद्वारा आफ्नो प्रभुसित विशेष सम्बन्ध एवं लगाव हुन्छ । त्यसले पाइला-पाइलामा त्यसको सहायता एवं मार्गदर्शन गर्दछ, यसैले नबी सल्लल्लाहु अलैहि वसल्लमलाई रात्रिको एकान्तमा तहज्जुदको नमाज़ पढ्नमाथि जोड दिइयो, किनकि तपाईंमाथि जुन महान कार्य सुम्पिएको थियो, त्यसमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई अल्लाहको सहायताको अत्याधिक आवश्यकता थियो । यही कारण हो कि स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लमलाई पनि जब कुनै महत्वपूर्ण समस्याको सामना हुन्थ्यो त उहाँ सल्लल्लाहु अलैहि वसल्लमले नमाज़को प्रयोजन गर्नुहुन्थ्यो । «إِذَا حَزَبَهُ أَمْرٌ فَزِعَ إِلَى الصَّلٰوةِ» (मुसनद अहमद तथा अबू दाऊद)

[3]अर्थात् असभ्यता एवं नराम्रो कुरालाई रोक्न साधन बन्दछ, जसरी औषधिहरुका विभिन्न प्रभाव छन् तथा भनिन्छ कि अमूक औषधि अमूक रोगलाई भन्दछ तथा वास्तवमा यस्तो हुन्छ, तर कहिले ? जब दुई कुराहरुलाई ध्यानमा राखिन्छ । एक त औषधिको नियमित रुपले त्यस नियम तथा प्रतिबन्धका साथ प्रयोग गरियोस्, जो वैद्य, हकीम अथवा डाक्टरले भनेको छ । दोस्रो परहेज (मुख बार्न) अर्थात यस्ता कुराहरुको प्रयोग नगरियोस् जो त्यस औषधिको प्रभावलाई कम गर्दछ अथवा समाप्त गर्दछ । यसैप्रकार नमाज़मा पनि अल्लाह तआलाले यस्तो अध्यात्मिक प्रभाव राखेको छ कि यो मनुष्यलाई असत्यता तथा नराम्रो कुराबाट रोक्दछ, परन्तु त्यसै समय जब नमाज़ सुन्नते नबी सल्लल्लाहु अलैहि वसल्लमको सुन्नत

ठूलो कुरा हो ।[१] तिमी जे-जति गरिराखेका छौ त्यससित अल्लाह (तआ़ला) अवगत छ ।

(४६) तथा अहले किताबसँग अत्यन्त सभ्यतापूर्ण विधिले वाद-विवाद गर,[२] परन्तु उनीसित जो उनीहरुमध्ये अन्यायी छन् ।[३] तथा स्पष्ट घोषणा गरिदेउ कि हाम्रो त त्यस किताबमाथि पनि ईमान छ, जो हामीमाथि

وَلَا تُجَادِلُوٓا أَهْلَ ٱلْكِتَٰبِ إِلَّا بِٱلَّتِى هِىَ أَحْسَنُ إِلَّا ٱلَّذِينَ ظَلَمُوا۟ مِنْهُمْ ۖ وَقُولُوٓا۟ ءَامَنَّا بِٱلَّذِىٓ أُنزِلَ إِلَيْنَا وَأُنزِلَ إِلَيْكُمْ وَإِلَٰهُنَا وَإِلَٰهُكُمْ

अनुसार ती विधि तथा प्रतिबन्धहरुका साथ पढिन्छ जो त्यसको शुद्धता एवं मान्यताका लागि अनिवार्य छन । जस्तै, त्यसका लागि प्रथम वस्तु नि:स्वार्थता हो, द्वितीय हृदयको पवित्रता अर्थात् नमाज़मा अल्लाहका अतिरिक्त अन्यतिर ध्यान नहोस्, तृतीय सामूहिक रुपमा एकत्रित भई निर्धारित समयमा पढियोस्, चतुर्थ नमाज़का आधार (कुरआनको पाठ, रूकूअ (झुक्नु), बैठक (कौम:), नत्मस्तक हुनु (सजदा) आदिमा सन्तुलन एवं शान्ति, पूर्ण एकाग्रता, खुशूअ-खुज़ूअ् (तल्लीनता एवं रूंधित) अवस्था, नियमित रूपमा त्यसको प्रवन्ध, र वैध एवं पवित्र जीविकाको प्रयोग । हाम्रा नमाज़हरु यी प्रतिबन्ध एवं नियमहरुबाट शून्य छन्, यसैकारण त्यसका प्रभाव पनि हाम्रा जीवनमा प्रदर्शित भइराखेका छैनन् जो कुरआन करीममा भनिएका छन् । केही विद्वानले यसका अर्थ आदेशका लागि गरेका छन् अर्थात् नमाज़ पढ्नेहरुलाई आवश्यक छ कि उनी असभ्य कार्य एवं नराम्रा कुराहरुबाट रोकियून् ।

[१]अर्थात् निर्लज्जता तथा दूराचारबाट रोक्नमा अल्लाहको वर्णन नमाज़को स्थापनाबाट पनि अति प्रभावशाली छ यसकारण कि मनुष्य जबसम्म नमाज़ पढ्दछ नराम्रो कुराबाट रोकिएको हुन्छ, परन्तु पछि त्यसको प्रभाव क्षीण हुन्छ । यसको विपरीत हर समय अल्लाहको स्मरण उसको लागि हर समय नराम्रो कुरामा बाधक रहन्छ ।

[२]यसकारण कि उनी ज्ञानी एवं बुद्धिमान छन्, कुरा बुझ्ने योग्यता एवं क्षमता राख्दछन् । यसकारण उनीसित विवाद एवं वार्तामा कटुता एवं तीब्रता उचित छैन ।

[३]अर्थात् जो वाद-विवादमा अतिले काम लिन्छन् भने तिमीलाई पनि कडा कुरा तथा भाषा प्रयोग गर्ने अनुमति छ । केही विद्वानहरुले प्रथम गुटसित तात्पर्य ती अहले किताब लिएका छन् जो मुसलमान भइहालेका थिए तथा दोस्रो गुटसित ती मानिसहरु जो मुसलमान भएनन्, बरु यहूदी एवं इसाई नै रहे तथा केही ज्ञाताहरुले ظَلَمُوا مِنْهُم को अभिप्राय ती अहले किताबलाई लिएका छन् जो मुसलमानहरुका विरुद्ध हिंसक विचार राख्दथे तथा लड्थे, भिड्थे । उनीहरुसित तिमी पनि लड्दै गर, यहाँसम्मकि उनीहरु मुसलमान होऊन् अथवा सुरक्षाकर (जिज़या) देऊन् ।

وَاحِدٌ وَّنَحْنُ لَهٗ مُسْلِمُوْنَ ﴿۴۶﴾

अवतरित गरिएको छ तथा त्यसमाथि पनि जो तिमीमाथि अवतरित गरियो ।[१] हाम्रो-तिम्रो प्रभु एउटै छ, हामी सबै उसैका आदेशा दिन्छौं

وَكَذٰلِكَ اَنْزَلْنَآ اِلَيْكَ الْكِتٰبَ ۭ فَالَّذِيْنَ اٰتَيْنٰهُمُ الْكِتٰبَ يُؤْمِنُوْنَ بِهٖ ۚ وَمِنْ هٰٓؤُلَاۗءِ مَنْ يُّؤْمِنُ بِهٖ ۭ وَمَا يَجْحَدُ بِاٰيٰتِنَآ اِلَّا الْكٰفِرُوْنَ ﴿۴۷﴾

(४७) तथा हामीले त्यसैप्रकार तपाईंतिर आफ्नो किताब अवतरित गरेका छौं । अत: जसलाई हामीले किताब प्रदान गरेका छौं, उनीहरु त्यसमाथि ईमान कायम गर्दछन्[२] तथा उनीहरुमध्ये केही त्यसमाथि ईमान स्थापित राख्दछन्,[३] तथा हाम्रा आयतहरुलाई अस्वीकार मात्र काफिर नै गर्दछन् ।

وَمَا كُنْتَ تَتْلُوْا مِنْ قَبْلِهٖ مِنْ كِتٰبٍ وَّلَا تَخُطُّهٗ بِيَمِيْنِكَ اِذًا لَّارْتَابَ الْمُبْطِلُوْنَ ﴿۴۸﴾

(४८) तथा यसभन्दा पूर्व त तपाईं कुनै किताब पढ्नु हुन्नथ्यो[४] तथा न कुनै किताबलाई आफ्नो हातले लेख्नु हुन्थ्यो[५] कि यी असत्यका पूजारीहरु शंका एवं सन्देहमा पर्दथे ।[६]

---

[१]अर्थात् तौरात तथा इंजीलमाथि । अर्थात् यी पनि अल्लाहका तर्फबाट अवतरित गरिएका हुन् तथा यो कि इस्लामको धर्मविधान आउनु तथा मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम नबी उद्‌घोषित हुनुभन्दा पूर्व यही अल्लाहको धर्म विधान थियो ।

[२]यसबाट तात्पर्य अब्दुल्लाह बिन सलाम आदि हुन् । किताब प्रदानबाट तात्पर्य हो त्यसका अनुसार कर्म गर्नु । जस्तो कि त्यसका अनुसार जो कर्म गर्दैनथे, उनीहरुलाई यो किताब प्रदान नै गरिएन ।

[३]यिनीबाट तात्पर्य मक्कावासी हुन्, जसमध्ये केहीले ईमान सुदृढ गरेका छन् ।

[४]यसकारण कि अनपढ थिए ।

[५]यसकारण कि लेख्नका लागि पनि शिक्षा आवश्यक छ, जो उहाँ सल्लल्लाहु अलैहि वसल्लमले कसैबाट प्राप्त गर्नुभएको थिएन ।

[६]अर्थात् यदि उहाँ केही पढे-लेखेका भए अथवा कुनै गुरुबाट शिक्षा प्राप्त गरेको भए, त भन्थे कि यो कुर्‌आन अमूक व्यक्तिको सहायता अथवा त्यसबाट शिक्षा प्राप्त गर्नुको परिणाम हो ।

بَلْ هُوَ اٰيٰتٌۢ بَيِّنٰتٌ فِيْ صُدُوْرِ الَّذِيْنَ
اُوْتُوا الْعِلْمَ ؕ وَمَا يَجْحَدُ بِاٰيٰتِنَاۤ
اِلَّا الظّٰلِمُوْنَ ﴿۴۹﴾

(४९) बरु यो (कुरआन) त प्रकाशमय आयतहरु (सुत्र) हुन् जो ज्ञानीहरुका हृदयमा सुरक्षित छन् ।[1] हाम्रा आयतहरुलाई अस्वीकार गर्नेहरु अत्याचारीहरुबाहेक कोही अन्य होइन ।

وَقَالُوْا لَوْلَاۤ اُنْزِلَ عَلَيْهِ اٰيٰتٌ
مِّنْ رَّبِّهٖ ؕ قُلْ اِنَّمَا الْاٰيٰتُ
عِنْدَ اللّٰهِ ؕ وَاِنَّمَاۤ اَنَا نَذِيْرٌ مُّبِيْنٌ ﴿۵۰﴾

(५०) तथा उनीहरुले भने कि यसमाथि केही निशानीहरु (चमत्कार) यसका प्रभुतिर बाट किन उतारिएन । (तपाईं) भनिदिनुस् निशानीहरु त सबै अल्लाहसित छन्[2] मेरो स्थिति त मात्र स्पष्टरुपले सचेतकको हो ।

اَوَلَمْ يَكْفِهِمْ اَنَّاۤ اَنْزَلْنَا عَلَيْكَ الْكِتٰبَ
يُتْلٰى عَلَيْهِمْ ؕ اِنَّ فِيْ ذٰلِكَ لَرَحْمَةً
وَّذِكْرٰى لِقَوْمٍ يُّؤْمِنُوْنَ ﴿۵۱﴾

(५१) के उनीहरुलाई यो पर्याप्त छैन कि हामीले तपाईंमाथि आफ्नो किताब अवतरित गर्‍यौं जो उनीमाथि पढिदैछ ।[3] यसमा कृपा (पनि) छ तथा शिक्षा (पनि) छ, यी मानिसहरुका लागि जो ईमान भएका छन् ।[4]

---

[1]अर्थात् कुरआन मजीदको हाफिज़हरु (कण्ठस्थ गर्नेहरु) का हृदयमा, यो कुरआनको चमत्कार हो कि कुरआन मजीद अक्षरशः हृदयमा सुरक्षित हुनजान्छ ।

[2]अर्थात् यी चिन्ह त्यसको चाहत एवं योजना जुन भक्तहरुमाथि उतार्नुको माँग गर्दछ, त्यहाँ त्यो अवतरित गर्दछ, यसमा अल्लाहका अतिरिक्त कसैको अधिकार छैन ।

[3]अर्थात् उनीहरु लक्षणहरुको माँग गर्दछन् । के उनीहरुका लागि लक्षण स्वरुप यो कुरआन प्राप्त छैन जो हामीले तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) माथि अवतरित गरेका छौं तथा जसको विषयमा उनीहरुलाई च्यालेन्ज गरिएको छ कि यस जस्तै कुरआन ल्याएर देखाउ अथवा कुनै एक अध्याय नै बनाएर प्रस्तुत गर । जब कुरआनका यस चमत्कार-प्रदर्शनका छैनन् त आदरणीय मूसा तथा ईसा अलैहिस्सलामको जस्तै यिनीहरुलाई चमत्कार देखाइए पनि, त्यसमाथि यिनीहरु कुन चाहिं ईमान स्वीकार गर्नेछन् ?

[4]अर्थात् उनीहरुका लागि जो यस कुराको पुष्टि गर्दछन् कि यो कुरआन अल्लाहको तर्फबाट आएको छ, किनकि ती नै यसबाट लाभान्वित हुन्छन् ।

قُلْ كَفٰى بِاللّٰهِ بَيْنِيْ وَبَيْنَكُمْ شَهِيْدًا ۚ يَعْلَمُ مَا فِى السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَالَّذِيْنَ اٰمَنُوْا بِالْبَاطِلِ وَكَفَرُوْا بِاللّٰهِ ۙ اُولٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ﴿٥٢﴾

(५२) भनिदिनुस् कि म र तिमीमा अल्लाह तआला साक्षी हुनु पर्याप्त छ,[१] त्यो आकाश तथा धर्तीका प्रत्येक वस्तुहरुलाई जान्दछ, जो मानिसहरु असत्यलाई मान्नेछन् तथा अल्लाह (तआला) सित कुफ्र गर्नेहरु छन्,[२] उनीहरु अत्याधिक हानिमा छन् ।[३]

وَيَسْتَعْجِلُوْنَكَ بِالْعَذَابِ ؕ وَلَوْلَآ اَجَلٌ مُّسَمًّى لَّجَآءَهُمُ الْعَذَابُ ؕ وَلَيَاْتِيَنَّهُمْ بَغْتَةً وَّهُمْ لَا يَشْعُرُوْنَ ﴿٥٣﴾

(५३) तथा यी मानिसहरु तपाईंसित प्रकोपको शीघ्रता गरिराखेका छन्,[४] यदि मेरो तर्फबाट निर्धारित समय नभएको भए त अहिलेसम्म उनको पासमा प्रकोप आइसकेको हुन्थ्यो,[५] यो निश्चित कुरो हो कि सहसा उनको अज्ञानतामा उनको पासमा प्रकोप आइपुग्ने छ ।[६]

---

[१]यस कुरोमाथि म अल्लाहको नबी हूँ तथा जो किताब अवतरित भएको छ निश्चित रुपमा अल्लाहको तर्फबाट हो ।

[२]अर्थात् अल्लाहका अतिरिक्त अन्यलाई पूज्य ठहराउँछन् तथा जो वास्तवमा इबादतको योग्य छ अर्थात् अल्लाह तआला, त्यसको इन्कार गर्दछन् ।

[३]किनकि ती नै मानिसहरु बौद्धिक उपद्रव एवं नराम्रा विचारमा लिप्त छन् । यसकारण उनीहरुले जो सौदा गरेका छन् कि ईमानको साटो कुफ्र तथा मार्गदर्शनको साटो मार्गविचलनलाई किनेका छन्, त्यसमा यिनीहरु हानि भोग्नेछन् ।

[४]अर्थात् सन्देष्टाको कुरा मान्नुको साटो भन्दछन् कि यदि तिमी साँचो हौ भने हामीमाथि प्रकोपको अवतरण गराइदेउ ।

[५]अर्थात् उनका कथन एवं कर्म अवश्य यस योग्य छन् कि उनीहरुलाई तुरुन्त धर्तीबाट समाप्त गरिदिइयोस् । परन्तु हाम्रो नियम छ कि प्रत्येक समुदायलाई एउटा निश्चित समयसम्म अवसर दिन्छौं, जब कर्म गर्नुको अवधि समाप्त हुनजान्छ, त हाम्रो प्रकोप आइपुग्छ ।

[६]अर्थात् प्रकोपको जब निर्धारित समय आइपुग्नेछ त यसप्रकार एक्कासि आइपुग्नेछ कि उनीहरुलाई थाहा पनि हुने छैन । यो निर्धारित समय त्यो हो जो मक्कावासीहरुका लागि उसले लेखिसकेको थियो, अर्थात् बद्रका युद्धमा हत्या एवं बन्दी बनाइनु

يَسْتَعْجِلُونَكَ بِالْعَذَابِ ۖ وَإِنَّ جَهَنَّمَ لَمُحِيطَةٌ بِالْكَافِرِينَ ﴿٥٤﴾

(५४) उनीहरु तिमीसित प्रकोपका लागि हतार गरिराखेका छन्, हाँलाकि नरकले काफ़िरहरुलाई आफ्नो घेरामा लिएको छ ।[1]

يَوْمَ يَغْشَاهُمُ الْعَذَابُ مِن فَوْقِهِمْ وَمِن تَحْتِ أَرْجُلِهِمْ وَيَقُولُ ذُوقُوا مَا كُنتُمْ تَعْمَلُونَ ﴿٥٥﴾

(५५) त्यस दिन उनका माथि तल्लाबाट उनीहरुलाई प्रकोपले ढाकिरहेको हुनेछ[2] तथा अल्लाह महानले भन्नेछ कि अब आफ्ना कुकर्महरुको स्वाद चाख ।

يَا عِبَادِيَ الَّذِينَ آمَنُوا إِنَّ أَرْضِي وَاسِعَةٌ فَإِيَّايَ فَاعْبُدُونِ ﴿٥٦﴾

(५६) हे मेरा ईमान भएका भक्तहरु ! मेरो धर्ती अति विस्तृत छ, त तिमी मेरै इबादत गर ।[3]

كُلُّ نَفْسٍ ذَائِقَةُ الْمَوْتِ ۖ ثُمَّ إِلَيْنَا تُرْجَعُونَ ﴿٥٧﴾

(५७) प्रत्येक प्राणीले मृत्युको स्वाद चाख्नु पर्नेछ तथा तिमी सबै हामीतिर नै फर्काइनेछौ ।[4]

---

अथवा त्यसपछि केयामत आउनु हो, जस पश्चात काफ़िरहरुका लागि यातना मात्र छ ।

[1]प्रथम يستعجلونك सूचना (विधेय) का रुपमा थियो तथा यो द्वितीय आश्चर्यका रुपका छ अर्थात् यो कुरा आश्चर्यजनक छ कि यातनाको स्थान (नरक) ले उनलाई आफ्नो घेरामा लिएको छ । तैपनि यिनीहरु प्रकोपका लागि हतार गरिराखेका छन् ! यद्यपि प्रत्येक आउने वस्तु निकट नै हुन्छ, त्यसलाई टाढा किन ठान्दछन् ? अथवा यो पुनरावृत्ति जोड दिनका लागि छ ।

[2]يقول को कर्ता अल्लाह हो अथवा फरिश्ताहरु, अर्थात् चारैतिरबाट जब उनीमाथि यातना भइराखेको हुनेछ, त्यतिखेर भनिनेछ ।

[3]त्यसमा यस्तो स्थानबाट जहाँ अल्लाहको इबादत गर्न कठिन छ तथा धर्ममा स्थित रहन कष्टदायी हुनजान्छ त स्थानान्तरणको आदेश छ, जुनप्रकार मुसलमानहरुले पहिला इथोपिया तथा तत्पश्चात मदीनातिर प्रस्थान गरे ।

[4]अर्थात् मृत्युको तीतो घुट्को त अन्तत: सबैले पिउनु पर्नेछ, स्थानान्तरण गर्छौ तैपनि तथा गर्दैनौ तैपनि, यसकारण तिम्रा लागि देश तथा सम्बन्धी एवं मित्रहरुलाई छाड्नु कठिन हुनु हुँदैन । मृत्यु त तिमीलाई जहाँपनि आइहाल्नेछ । परन्तु यदि अल्लाहको उपासना गर्दै मृत्यु आउँछ भने तिमी परलोकका सुखभोगी हुनेछौ, यसकारण कि मरे पश्चात त अल्लाहकै पासमा जानुपर्नेछ ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَنُبَوِّئَنَّهُم مِّنَ الْجَنَّةِ غُرَفًا تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا ۚ نِعْمَ أَجْرُ الْعَامِلِينَ ﴿٥٨﴾

(५८) तथा जसले ईमान स्वीकार गरे तथा पुण्यका कार्य पनि गरे उनीहरुलाई हामीले निश्चित रुपमा स्वर्गका, ती उच्च मकानहरुमा स्थान दिनेछौं जसमुनि नदीहरु बगिराखेका छन्[1] जहाँ उनी सधैं रहनेछन् ।[2] कार्य गर्नेहरुका लागि कति सुन्दर परिणाम छ ।

الَّذِينَ صَبَرُوا وَعَلَىٰ رَبِّهِمْ يَتَوَكَّلُونَ ﴿٥٩﴾

(५९) उनीहरु जसले धैर्य गरे,[3] तथा आफ्नो प्रभुमाथि भरोसा गर्दछन् ।[4]

وَكَأَيِّن مِّن دَابَّةٍ لَّا تَحْمِلُ رِزْقَهَا اللَّهُ يَرْزُقُهَا وَإِيَّاكُمْ ۚ وَهُوَ السَّمِيعُ الْعَلِيمُ ﴿٦٠﴾

(६०) तथा धेरैजसो[5] पशु छन् जो आफ्नो जीविका बोकेर हिंड्दैनन्[6] ती सबैलाई तथा तिमीलाई पनि अल्लाह तआ़लाले नै जीविका प्रदान

---

[1]अर्थात् स्वर्गवासीहरुका घर उच्च हुनेछन्, जसमुनि सरिताहरु प्रवाहित हुनेछन् । यी सरिताहरु शीतल जल, मदिरा, मधु तथा दूधका हुनेछन्, यसका अतिरिक्त उनका धाराहरु जतातिर मोड्न चाहनेछौ, मोडिनेछन् ।

[2]उनको क्षय (अन्त) को भय हुनेछैन न उनीहरुलाई मृत्युको भय, न कुनै अन्य स्थानतिर जानुको भय ।

[3]अर्थात् धर्ममा अटल रुपमा स्थाई रहे, स्थानान्तरणका कष्ट सहन गरे, परिवार भएका निकट सम्बन्धी एवं मित्रहरुको दूरीलाई मात्र अल्लाहको प्रसन्नताका लागि सहन गरे ।

[4]धार्मिक तथा सांसारिक प्रत्येक विषय एवं संस्कृतिमा ।

[5] كَأَيِّن मा काफ (ك) उपमाको लागि हो तथा अर्थ हो कति नै अथवा धेरैजसो ।

[6]किनकि उठाएर लैजान उनमा साहस नै हुँदैन, त्यसैप्रकार उनी भण्डार पनि गर्न सक्दैनन् । अर्थ यो हो कि जीविका कुनै विशेष स्थानसित सम्बन्धित हुँदैन, बरु अल्लाहको जीविका आफ्नो समस्त सृष्टिका लागि सामान्यरुपले छ, त्यो जो पनि होस् बरु अल्लाह तआ़लाले हिज़रत (स्थानान्तरण) गर्ने सहाबालाई पूर्वबाट कहीं अधिक तथा पवित्र जीविका प्रदान गऱ्यो, यसको अतिरिक्त अल्प अवधिमा नै उनीहरुलाई अरबका विभिन्न क्षेत्रहरुको शासन प्रदान गरिदियो । رضي الله عنهم أجمعين

गर्दछ ।[1] त्यो अत्याधिक सुन्ने जान्ने छ ।[2]

(६१) तथा यदि तपाईं उनीहरुसित सोध्नु हुन्छ कि धर्ती तथा आकाशको स्रष्टा तथा सूर्य एवं चन्द्रमालाई कार्यमा लगाउने को हो त उनको उत्तर यही हुनेछ कि अल्लाह तआला,[3] त फेरि कता फर्कि गइराखेका छन् ।[4]

وَلَئِن سَأَلْتَهُم مَّنْ خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ لَيَقُولُنَّ اللَّهُ فَأَنَّىٰ يُؤْفَكُونَ ﴿٦١﴾

(६२) अल्लाह तआला आफ्ना भक्तहरुमध्ये जसलाई चाहन्छ अत्याधिक जीविका प्रदान गर्दछ तथा जसलाई चाहन्छ कम,[5] निःसन्देह अल्लाह

اللَّهُ يَبْسُطُ الرِّزْقَ لِمَن يَشَاءُ مِنْ عِبَادِهِ وَيَقْدِرُ لَهُ إِنَّ اللَّهَ

[1]अर्थात् कोही कमजोर छ अथवा शक्तिशाली, संसाधनले परिपूर्ण छ अथवा शून्य, स्वदेशमा छ अथवा शरणार्थी एवं परदेशी, सबैको जीविका चलाउने त्यही अल्लाह हो, जो कमिलाहरुलाई धर्तीका कुनामा, पंक्षीहरुलाई हावाहरुमा, माछा तथा अन्य जलीय जीवहरुलाई समुद्रका गहिराईहरुमा जीविका पुऱ्याउँछ । यस अवसरमा अर्थ यो हो कि निर्धनता एवं भोकमरीको भय हिज़रतमा बाधक नबनोस्, यसकारण कि अल्लाह तआला तिम्रो तथा समस्त सृष्टिको जीविका उपलब्ध गराउन उत्तरादायी छ ।

[2]त्यो ज्ञाता छ तिम्रा कर्महरुको तथा तिम्रा गुप्त तथा प्रकटको । यसकारण केवल उसैसित तर्स, उसैको आज्ञा पालनामा सफलता एवं लाभ छ तथा उसको अवज्ञामा दूर्भाग्य एवं हानि ।

[3]अर्थात् यी मूर्तिपूजक मुसलमानहरुलाई मात्र एकेश्वरवादमा विश्वास गर्नका कारण यातनाहरु पुऱ्याइराखेका छन्, उनीहरुसित यदि सोधिन्छ कि आकाश एवं धर्तीलाई नास्तिबाट उत्पन्न गर्ने तथा सूर्य एवं चन्द्रमालाई आफ्ना परिधिमा परिक्रमा गराउने को हो, त त्यहाँ यो स्वीकार गर्नका लागि बाध्य छन् कि यी सबैथोक गर्ने अल्लाह हो ।

[4]अर्थात् तर्कहरु एवं स्वीकारका उपरान्त सत्यबाट यो विमुख हुनु आश्चर्यजनक छ।

[5]यो मूर्तिपूजकहरुको आपत्तिको उत्तर हो, जो उनी मुसलमानसित गर्दछन् कि यदि तिमी सत्यमा छौ भने निर्धन एवं निर्बल किन हौ ? अल्लाहले भने कि जीविकामा विस्तार एवं कमी अल्लाहको अधिकारमा छ, त्यो आफ्ना इच्छा एवं नीति अनुसार जसलाई चाहन्छ कम अथवा अधिक प्रदान गर्दछ । यसको सम्बन्ध त्यसको प्रसन्नता एवं क्रोधसित छैन ।

بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٦٢﴾

तआ़ला प्रत्येक वस्तुको ज्ञाता छ ।[१]

وَلَئِن سَأَلْتَهُم مَّن نَّزَّلَ مِنَ السَّمَاءِ مَاءً فَأَحْيَا بِهِ الْأَرْضَ مِن بَعْدِ مَوْتِهَا لَيَقُولُنَّ اللَّهُ ۚ قُلِ الْحَمْدُ لِلَّهِ ۚ بَلْ أَكْثَرُهُمْ لَا يَعْقِلُونَ ﴿٦٣﴾

(६३) तथा यदि तपाईं उनीसित प्रश्न गर्नुहुन्छ कि आकाशबाट जलवृष्टि गरी धर्तीलाई त्यसको मृत्यु पश्चात जीवित गर्ने को हो, त निःसन्देह उनको उत्तर यही हुनेछ कि अल्लाह तआ़ला । तपाईं भनिदिनुस् कि सम्पूर्ण प्रशंसा अल्लाहकै लागि छ, तर उनीमध्ये अधिकांश निर्बोध छन् ।[२]

وَمَا هَٰذِهِ الْحَيَاةُ الدُّنْيَا إِلَّا لَهْوٌ وَلَعِبٌ ۚ وَإِنَّ الدَّارَ الْآخِرَةَ لَهِيَ الْحَيَوَانُ ۚ لَوْ كَانُوا يَعْلَمُونَ ﴿٦٤﴾

(६४) तथा संसारको यो जीवन त मात्र मनोरञ्जन तथा क्रिडा हो,[३] हो सत्य जीवन त परलोकको घर हो,[४] यदि यिनी जान्ने भएको भए ![५]

فَإِذَا رَكِبُوا فِي الْفُلْكِ دَعَوُا اللَّهَ مُخْلِصِينَ لَهُ الدِّينَ فَلَمَّا

(६५) जब यिनीहरु डुङ्गामा सवार हुन्छन् त अल्लाह (तआ़ला) लाई नै पुकार्दछन् । त्यसका लागि इबादतलाई विशेष गरी, अनि जब उनीहरु

[१]यसलाई पनि त्यही जान्दछ कि अधिक जीविका कसको लागि लाभकारी छ तथा कसको लागि होइन ।

[२]किनकि वृद्धि हुन्थ्यो भने आफ्ना प्रभुका साथ पत्थरहरुलाई, मृतकहरुलाई प्रभु बनाउँदैनथे, न उनीहरुमा यो प्रतिकूलता हुन्थ्यो कि अल्लाह तआ़लालाई स्रष्टा एवं रचयिता तथा पालनकर्ता मान्दा-मान्दै पनि मूर्तिहरुलाई सङ्कटकारी तथा पूज्य ठानिराखेका छन् ।

[३]अर्थात् जुन संसारले उनीहरुलाई परलोकबाट अन्धो तथा त्यसको लागि यात्रा साधन गर्नुबाट अचेत गरेको छ, त्यो एउटा खेलकूद भन्दा अधिक महत्व राख्दैन । काफ़िर सांसारिक व्यापारमा लीन रहन्छ, त्यसका लागि रात-दिन परिश्रम गर्दछ, परन्तु जब मर्दछ त खाली हात हुन्छ । जुनप्रकार बच्चाहरु सारा दिन माटोका घर बनाई खेल्दछन्, अनि रित्तो हात घरतिर फर्कन्छन्, थकाई बाहेक उनीहरुलाई केही प्राप्त हुँदैन ।

[४]यसकारण यस्ता पुण्य कार्य गर्नुपर्छ जसबाट परलोकको घर अलङ्कृत हुनसकोस्।

[५]किनकि यदि उनीहरु यो कुरा जान्दथे त परलोकबाट निश्चिन्त भएर संसारमा लीन हुँदैनथे । यसकारण उनको उपचार ज्ञान हो, धार्मिक ज्ञान ।

نَجّٰهُمْ اِلَى الْبَرِّ اِذَا هُمْ يُشْرِكُوْنَ ﴿٦٥﴾

उनीहरुलाई स्थलतिर सुरक्षित लैजान्छ त त्यतिखेरै शिर्क गर्नथाल्छन् ।[1]

لِيَكْفُرُوْا بِمَآ اٰتَيْنٰهُمْ ۚ وَلِيَتَمَتَّعُوْا ۚ فَسَوْفَ يَعْلَمُوْنَ ﴿٦٦﴾

(६६) ताकि हाम्रा प्रदान गरिएका उपकारहरुलाई नकारिरहून् तथा लाभान्वित भइराखून् ।[2] छिटै उनीहरुलाई थाहा भइहाल्नेछ ।

اَوَلَمْ يَرَوْا اَنَّا جَعَلْنَا حَرَمًا اٰمِنًا وَّيُتَخَطَّفُ النَّاسُ مِنْ حَوْلِهِمْ ۭ اَفَبِالْبَاطِلِ يُؤْمِنُوْنَ وَبِنِعْمَةِ اللّٰهِ

(६७) के यिनी देख्दैनन् कि हामीले हरमलाई शान्तिमय बनाइदियौं, जबकि उनका निकटवर्ती क्षेत्रबाट मानिसहरु अपहरित गरिन्छन्,[3] के यिनीहरु असत्यमा त विश्वास

[1]मूर्तिपूजकहरुका यस विपरीततालाई पनि कुरआन करीममा विभिन्न स्थानहरुमा वर्णन गरिएको छ । यस प्रतिकूलतालाई आदरणीय इकरमः ले बुझिहालेका थिए, जसका कारण उनलाई इस्लाम धर्म धारण गर्नुको सौभाग्य प्राप्त भयो । उनका सम्बन्धमा यो भनिएको छ कि मक्काको विजयका पश्चात उनी मक्कावाट भागेर गए ताकि नबी सल्लल्लाहु अलैहि वसल्लमको पकडबाट बचून् । यिनी इथोपिया जानका लागि डुङ्गामा बसे कि एकैछिनमा डुङ्गा भूमरीमा फँस्यो, त डुङ्गामा सवार मानिसहरुले भने कि एकाग्रता एवं शुद्ध हृदयले प्रभुसित प्रार्थना गर, यसकारण कि यहाँ उसबाहेक कोही बचाउने छैन । आदरणीय इकरमःले यो सुनेर भने कि यदि यहाँ समुद्रमा त्यसको अतिरिक्त कोही बचाउन सक्दैन भने धर्तीमा पनि कोही यसबाहेक बचाउन सक्दैन । तथा त्यसै समय यो निश्चय गरे कि यदि म किनारमा सुरक्षित पुगें भने त मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमद्वारा इस्लाम धर्म स्वीकार गर्नेछु । अतः यहाँबाट सुरक्षित फर्के पश्चात इस्लाम धर्म स्वीकार गरे । رضي الله عنه (इब्ने कसीर, उद्धधृत सीरत मोहम्मद बिन इसहाक)

[2]यो لام अक्षर كَـــي को हो, जो कारण बताउनको लागि हो अर्थात् बाँचे पश्चात अल्लाहको साझेदार बनाउनु यसकारण हो कि उनीहरु कुफ्रका कार्य गरिरहे तथा सांसारिक स्वादबाट लाभान्वित भइरहे, किनकि यदि उनीहरु कृतज्ञता व्यक्त गर्दथे भने एकेश्वरवादमा दृढ रहन्थे तथा एक मात्र अल्लाहलाई नै सधैं पुकार्थे । केही ज्ञाताहरुका निकट यो لام परिणामवाचक हो, अर्थात् यद्यपि उनको विचार कुफ्र गर्नु होइन । परन्तु पुनः शिर्क गर्नुको परिणाम अन्ततः कुफ्र नै हो ।

[3]अल्लाह तआला त्यस उपकारको वर्णन गरिराखेको छ जो मक्कावासीहरुमाथि उसले गरेको छ कि हामीले उनका हरमलाई शान्तिमय बनाएका छौं, जसका निवासी हत्या एवं अपहरण, लुटमार आदिबाट सुरक्षित छन्,

يَكْفُرُونَ ﴿٦٧﴾

राख्दछन् तथा अल्लाह (तआ़ला) का उपकारहरुमा कृतघ्नता गर्दछन् ।[1]

وَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا أَوْ كَذَّبَ بِالْحَقِّ لَمَّا جَاءَهُ ۚ أَلَيْسَ فِي جَهَنَّمَ مَثْوًى لِّلْكَافِرِينَ ﴿٦٨﴾

(६८) तथा त्यसभन्दा ठूलो अत्याचारी को होला जो अल्लाह (तआ़ला) माथि मिथ्यारोपण गर्दछ[2] अथवा जब सत्य उसको पासमा आउँछ, त्यो त्यसलाई असत्य बताउँछ,[3] के यस्ता काफ़िरहरुको वासस्थान नरकमा हुनेछैन ?

وَالَّذِينَ جَاهَدُوا فِينَا لَنَهْدِيَنَّهُمْ سُبُلَنَا ۚ وَإِنَّ اللَّهَ لَمَعَ الْمُحْسِنِينَ ﴿٦٩﴾

(६९) तथा जो मानिस हाम्रा मार्गमा दुख सहन गर्दछन्,[4] हामीले उनीहरुलाई आफ्ना मार्ग अवश्य देखाउनेछौं ।[5] निःसन्देह अल्लाह (तआ़ला) सदाचारीहरुको सहायक हुनुहुन्छ ।[6]

---

जबकि अरबका अन्य क्षेत्र यसप्रकारको शान्ति सुरक्षाबाट बञ्चित छन् । लुट एवं हत्या उनीकहाँ सामान्य तथा प्रत्येक दिनको व्यवसाय हो ।

[1]अर्थात् के यस महान उपहारको कृतज्ञता यही हो कि उनीहरु अल्लाहसँग शिर्क गरून्, तथा झूठा देवता एवं मूर्तिहरुको पूजा गरुन् । यस उपकारको माँग त यो थियो कि उनीमात्र एक अल्लाहको इबादत गर्दथे तथा त्यसका संदेष्टा (सल्लल्लाहु अलैहि वसल्लम) लाई मान्दथे ।

[2]अर्थात् दावी गरोस् कि ममथि अल्लाहको तर्फबाट प्रकाशना आउँछ, जबकि यस्तो नहोस् अथवा कोही यो भनोस् कि म पनि त्यो वस्तु अवतरित गर्न सक्दछु जो अल्लाहले अवतरित गरेको छ । यो रचिएको असत्य हो तथा दावीदार झूठा ।

[3]यो झुठ्लाउनु हो तथा त्यसलाई गर्ने झूठा । झूठ रच्नु तथा झुठ्लाउनु दुबै कुफ्र हो, जसको दण्ड नरक छ ।

[4]अर्थात् धर्मादेशहरुका अनुसार कर्म गर्नुमा जो कठिनाई, परीक्षाहरु तथा कष्ट आउँछन् ।

[5]सदाचारीसित तात्पर्य अल्लाहलाई सर्वव्यापी मानेर प्रत्येक पुण्यका कार्य पवित्र हृदयका साथ गर्नु, नबी सल्लल्लाहु अलैहि वसल्लमको सुन्नतका अनुसार गर्नु, नराम्रोको साटो ।

## सूरतु रूम-३०

## سُوْرَةُ الرُّوْمِ

सूर: रूमं मक्कामा अवतरित भएको, यसमा साठी आयत तथा ६ रूकूअ छन् ।

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु एवं अत्यन्त दयालु छ ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

(१) अलिफ. लाम. मीम.

الٓمّٓ ﴿١﴾

(२) रोमन पराजित भए ।

غُلِبَتِ الرُّوْمُ ﴿٢﴾

(३) निकटवर्ती क्षेत्रमा तथा उनी पराजित हुनुका पश्चात निकट भविष्यमा विजयी हुनेछन् ।

فِيْٓ اَدْنَى الْاَرْضِ وَهُمْ مِّنْۢ بَعْدِ غَلَبِهِمْ سَيَغْلِبُوْنَ ﴿٣﴾

(४) केही वर्षहरुमा नै, यसभन्दा पूर्व तथा यसका पश्चात पनि अधिकार अल्लाह (तआला) कै छ। तथा त्यस दिन मुसलमान प्रसन्न हुनेछन् ।

فِيْ بِضْعِ سِنِيْنَ ۬ؕ لِلّٰهِ الْاَمْرُ مِنْ قَبْلُ وَمِنْۢ بَعْدُ ؕ وَيَوْمَىِٕذٍ يَّفْرَحُ الْمُؤْمِنُوْنَ ﴿٤﴾

(५) अल्लाह (तआला) को सहायताले,[1] त्यो जसलाई चाहन्छ सहायता गर्दछ । तथा

بِنَصْرِ اللّٰهِ ؕ يَنْصُرُ مَنْ يَّشَآءُ ؕ وَهُوَ الْعَزِيْزُ الرَّحِيْمُ ﴿٥﴾

उपकार गर्ने, आफ्नो अधिकार त्याग गरी अरुहरुलाई उनका अधिकारभन्दा बढी दिनु । यी सबै सदाचारका परिधिमा सम्मिलित छन् ।

[1]रिसालत कालमा दुई ठूला शक्तिहरु थिए । एउटा फारस (ईरान) को तथा दोस्रो रोमको । प्रथम वर्णित राज्य अग्निपूजक तथा दोस्रो ईसाई अर्थात अहले किताब थियो । मक्काका मूर्तिपूजकहरुका सहानुभूति ईरानसँग थियो किनकि दुबै अल्लाहका अतिरिक्त अन्यका पूजारी थिए, जबकि मुसलमानहरुका सहानुभूति रोमका इसाई राज्यसँग थियो, यसकारण कि इसाई पनि मुसलमानहरु जस्तै अहले किताब थिए तथा प्रकाशना एवं सन्देष्टामा विश्वास गर्दथे । उनको आपसमा वाद-विवाद भइरहन्थ्यो । नबी सल्लल्लाहु अलैहि वसल्लमको नबूअतको घोषणाका केही समय पश्चात यस्तो भयो कि ईरानको राज्य रोमको इसाई राज्यमाथि विजयी भयो, जसमाथि मूर्तिपूजकहरुलाई प्रसन्नता भयो तथा मुसलमानहरुलाई दुख भयो, यस अवसरमा कुरआनका यी आयत अवतरित भए, जसमा यो भविष्यवाणी गरियो कि بِضْعِ سِنِيْنَ (केही वर्ष) भित्र रूमी पुन: विजयी हुनेछन् ।

मूल विजयी एवं प्रभावशाली तथा कृपालु त्यही छ ।

وَعْدَ اللَّهِ ۖ لَا يُخْلِفُ اللَّهُ وَعْدَهُ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ⑥

(६) अल्लाहको वचन छ,[1] अल्लाह (तआ़ला) आफ्ना वचन भङ्ग गर्दैन परन्तु अधिकांश मानिसहरु जान्दैनन् ।

يَعْلَمُونَ ظَاهِرًا مِّنَ الْحَيَاةِ الدُّنْيَا وَهُمْ عَنِ الْآخِرَةِ هُمْ غَافِلُونَ ⑦

(७) उनी त (केवल) सांसारिक जीवनका प्रत्यक्षलाई (नै) जान्दछन्, तथा आख़िरतबाट त सर्वथा नै निश्चिन्त छन्।[2]

तथा विजयी पराजित एवं पराजित विजयी हुनेछन् । प्रत्यक्ष साधनहरुबाट यो भविष्यवाणी असम्भव प्रतीत हुन्थ्यो तैपनि मुसलमानहरुलाई अल्लाहको यस आदेशका कारण विश्वास थियो कि यस्तो अवश्य भएर रहनेछ । यसैकारण अबू बक्र सिद्दीक رضى الله عنــه ले अबू ज़हलसित यो शर्त लगाइहाले कि रूमी पाँच वर्षभित्र पुनः विजयी हुनेछन् । नबी सल्लल्लाहु अलैहि वसल्लमका ज्ञानमा जब यो कुरा आयो त भन्नुभयो कि بِضْعٌ को शब्द तीनदेखि दश वर्षसम्मका अंकका लागि प्रयोग हुन्छ, तिमीले पाँच वर्षको अवधि कम राखेका छौ, यसलाई बढाइहाल । अतः उहाँ सल्लल्लाहु अलैहि वसल्लमका निर्देशमा आदरणीय अबू-बक्रले अवधि बढाइहाले । अनि त्यस पश्चात यस्तै नै भयो कि रोमी नौ वर्षको अवधिभित्र अर्थात सातौं वर्ष पुनः इरानमाथि विजयी भए (तिर्मिजी तफ़सीर सूरः अर्रूम) । केही ज्ञाताहरु भन्दछन् कि रोमीहरुलाई यो विजयी त्यस समय भयो जब बद्रमा मुसलमानहरुलाई काफ़िरहरुमाथि विजय प्राप्त भयो, तथा मुसलमान आफ्नो विजयीमाथि प्रसन्न थिए । रोमीहरुको यो विजय क़ुर्आन करीमको सत्यताको बहुत ठूला प्रमाण हो । निकटवर्ती धर्तीसित तात्पर्य अरबको धर्तीका निकटका क्षेत्र हुन्, अर्थात् सीरिया तथा फिलिस्तिन आदि जहाँ इसाईहरुको राज्य थियो ।

[1]अर्थात् हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) ! हामी तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई जे सूचना दिइराखेका छौं कि निकट भविष्यमा रूमी इरानीहरुमाथि पुनः विजयी हुनेछन्, यो अल्लाहको सत्य वचन हो जो निर्धारित अवधिमा निश्चित रुपले पूरा भएर रहनेछ ।

[2]अर्थात् अधिकतर मानिसहरुलाई सांसारिक कुराको अधिक ज्ञान छ । अतः उनीहरु त्यसमा त आफ्नो चतुऱ्याइं एवं योग्यताको प्रदर्शन गर्दछन्, जसका लाभ अस्थाई एवं क्षणिक छन्, तर परलोकका विषयसित यिनी अचेत छन् जसका लाभ स्थाई एवं दृढ छन् । अर्थात् सांसारिक कुराहरुलाई राम्ररी जान्दछन् तथा धर्मसित बिल्कुलै अनभिज्ञ छन् ।

أَوَلَمْ يَتَفَكَّرُوا فِيٓ أَنفُسِهِمۗ مَّا خَلَقَ ٱللَّهُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ وَمَا بَيْنَهُمَآ إِلَّا بِٱلْحَقِّ وَأَجَلٍ مُّسَمًّىۗ وَإِنَّ كَثِيرًا مِّنَ ٱلنَّاسِ بِلِقَآيِٕ رَبِّهِمْ لَكَٰفِرُونَ ۝٨

(८) के उनीहरुले आफ्ना हृदयमा यो विचार गरेनन् कि अल्लाह (तआला) ले आकाशहरुलाई तथा धर्ती एवं उनका मध्ये जे-जति छ सबैलाई अति उत्तम अनुमानले[१] निर्धारित समयसम्मका लागि (नै) उत्पन्न गरेको छ, हो अधिकांश मानिसहरु निःसन्देह आफ्नो प्रभुको साक्षात्कारलाई अस्वीकार गर्दछन् ।[२]

أَوَلَمْ يَسِيرُوا فِي ٱلْأَرْضِ فَيَنظُرُوا كَيْفَ كَانَ عَٰقِبَةُ ٱلَّذِينَ مِن قَبْلِهِمْۚ كَانُوٓا أَشَدَّ مِنْهُمْ قُوَّةً وَأَثَارُوا ٱلْأَرْضَ وَعَمَرُوهَآ

(९) के उनीहरुले धर्तीमा भ्रमण गरी देखेनन्[३] कि उनीभन्दा पूर्वका मानिसहरुका परिणाम कस्तो (नराम्रो) भयो ?[४] उनीहरु तिनीहरुभन्दा अत्याधिक शक्तिशाली (एवं बलवान) थिए,[५] तथा उनीहरुले पनि धर्ती

[१]अथवा एउटा उद्देश्य एवं सत्यका साथ पैदा गरेको छ, व्यर्थ होइन । तथा त्यो उद्देश्य यो हो कि सदाचारीहरुलाई सदाचारको दण्ड पुरस्कार तथा दूराचारीहरुलाई उनका दूराचारको दण्ड दिइयोस् । अर्थात् के उनीहरु आफ्ना अस्तित्वमा विचार गर्दैनन् कि कसरी त्यसलाई तुच्छबाट उच्च गऱ्यो तथा पानीको एक तुच्छ थोपाले उसको सृष्टि गऱ्यो । अनि आकाश एवं धर्तीलाई एउटा विशेष उद्देश्यका लागि विस्तृत कम प्रदान गऱ्यो, यसका अतिरिक्त यी सबैका लागि एक समय निर्धारित गऱ्यो अर्थात् प्रलय (केयामत) को दिन जुन दिन यी सबै समाप्त हुनेछन् । अर्थ यो हो कि यदि उनीहरु ती सबै कुरामाथि विचार गर्दथे भने निश्चित रुपले अल्लाहका अस्तित्व, त्यसको प्रभु एवं पूज्य हुने एवं उसका सामर्थ्यको उनीहरुलाई संवेदन एवं ज्ञान हुन्थ्यो तथा त्यसमाथि ईमान सुदृढ गर्दथे ।

[२]तथा यसको कारण त्यही सृष्टिमा विचार एवं चिन्तन नहुनु हो, अन्यथा केयामतलाई अस्वीकार गर्नुको कुनै उचित आधार छैन ।

[३]यी पुरातत्व, खण्डहर तथा शिक्षा ग्रहण गर्नुका प्रतीकमा विचार एवं चिन्तन नगर्नुमा फट्कार (झपार) गरिदैछ । अर्थ यो हो कि भ्रमण गरेर उनीहरु देखिसकेका छन् ।

[४]अर्थात् ती काफ़िरहरुको, जसलाई अल्लाहले उनका कुफ्र, सत्यबाट इन्कार तथा संदेष्टाहरुलाई झुठ्लाउनुका कारण नाश गरिदियो ।

[५]अर्थात् कुरैश एवं मक्कावासीहरुभन्दा अधिक ।

أَكْثَرَ مِمَّا عَمَرُوهَا وَجَاءَتْهُمْ رُسُلُهُم بِالْبَيِّنَاتِ ۖ فَمَا كَانَ اللَّهُ لِيَظْلِمَهُمْ وَلَٰكِن كَانُوا أَنفُسَهُمْ يَظْلِمُونَ ﴿٩﴾

भोग गरेका थिए[1] तथा उनीभन्दा अधिक जनसंख्या बनाएका थिए[2] तथा उनका पासमा उनका रसूल चमत्कार लिएर आएका थिए,[3] यो त असम्भव थियो कि अल्लाह (तआला) ले उनीमाथि अत्याचार गर्दथ्यो[4] परन्तु (वास्तवमा) उनीहरु स्वयं आफ्ना प्राणहरुमाथि अत्याचार गर्दथे ।[5]

ثُمَّ كَانَ عَاقِبَةَ الَّذِينَ أَسَاءُوا السُّوأَىٰ أَن كَذَّبُوا بِآيَاتِ اللَّهِ وَكَانُوا بِهَا يَسْتَهْزِئُونَ ﴿١٠﴾

(१०) अनि अन्त्यमा दुष्कर्मीहरुको दुष्परिणाम भयो,[6] यसकारण कि उनीहरु अल्लाहका आयतहरुलाई झुठ्लाउँथे तथा उनका उपहास गर्दथे ।

اللَّهُ يَبْدَأُ الْخَلْقَ ثُمَّ يُعِيدُهُ ثُمَّ إِلَيْهِ تُرْجَعُونَ ﴿١١﴾

(११) अल्लाह (तआला) नै सृष्टिको उत्पत्ति गर्दछ, अनि त्यसैले उनीहरुलाई पुन: पैदा गर्नेछ ।[7]

---

[1]अर्थात् मक्कावासी त कृषिसित अन्जान छन्, परन्तु प्राचीन समुदाय उनीभन्दा यस गुणमा पनि बढी थिए ।

[2]यसकारण कि उनको आयु पनि अधिक थियो, शारीरिक शक्तिमा पनि अधिक थिए, जीविकापार्जनका साधन पनि उनलाई अधिक प्राप्त थिए, तसर्थ उनीहरुले भवन पनि अधिक निर्माण गरे, कृषि पनि गरे तथा जीविकापार्जनका साधनबाट अधिक जुटाए ।

[3]परन्तु उनीहरु तिनीहरुमाथि ईमान स्वीकार गरेनन् । परिणाम यो भयो कि समस्त शक्ति, उन्नति, सुख तथा समृद्धिका उपरान्त पनि विनाश उनको भाग्य बन्न गयो ।

[4]कि उनीहरुलाई विना पाप यातनामा घेरदथ्यो ।

[5]अर्थात् अल्लाहलाई इन्कार गरी एवं सन्देष्टाहरुलाई झुठ्लाएर ।

[6]سُوأَىٰ यो سُوء बाट أَسْوَأ को स्त्रीलिङ्ग हो, जस्तै حُسْنَىٰ यो أَحْسَن को स्त्रीलिङ्ग हो अर्थात् उनको जो परिणाम भयो अत्यन्त दुष्परिणाम थियो ।

[7]जुनप्रकार अल्लाह तआला प्रथम पटक पैदा गर्नुको सामर्थ्य राख्दछ, त्यसैप्रकार मरणोपरान्त पुन: जीवित गर्नुको सामर्थ्य राख्दछ, यसकारण कि पुन: जीवित गर्नु प्रथम पटक पैदा गर्नुभन्दा अधिक कठिन छैन ।

अनि तिमी सबै उसैतिर फर्काइनेछौ ।[1]

وَيَوْمَ تَقُومُ السَّاعَةُ يُبْلِسُ الْمُجْرِمُونَ ⑫

(१२) तथा जुन दिन केयामत स्थापित हुनेछ त पापी आश्चर्य चकित हुनेछन् ।[2]

وَلَمْ يَكُن لَّهُم مِّن شُرَكَائِهِمْ شُفَعَاءُ وَكَانُوا بِشُرَكَائِهِمْ كَافِرِينَ ⑬

(१३) तथा उनका सबै साझेदारहरुमध्ये एउटा पनि उनको सिफारिश (अभिस्तावना) गर्ने छैनन्[3] तथा स्वयं यिनी पनि आफ्ना देवताहरुलाई अस्वीकार गर्नेछन् ।[4]

وَيَوْمَ تَقُومُ السَّاعَةُ يَوْمَئِذٍ يَتَفَرَّقُونَ ⑭

(१४) तथा जुन दिन केयामत स्थापित हुनेछ, त्यसदिन (सबै गुट) विभाजित हुनेछन् ।[5]

---

[1]अर्थात् हश्रका मैदानमा तथा हिसाबका स्थानमा, जहाँ त्यसले निर्णय एवं न्यायको प्रबन्ध गर्नेछ ।

[2]إِبْلَاسٌ को अर्थ हो आफ्नो पक्षको पुष्टिका लागि कुनै तर्क प्रस्तुत गर्न नसक्नु तथा चकित भई शान्त भई उभिराख्नु तथा مُبْلِس त्यो हुनेछ जो निराश भई उभिराखेको होस् तथा उसलाई कुनै तर्क समझमा नआइराखेको होस् । केयामतका दिन काफिर तथा मूर्तिपूजकहरुको यही स्थिति हुनेछ, अर्थात् यातना देख्नुका पश्चात उनीहरु प्रत्येक सूचनाबाट निराश एवं तर्क-वितर्क गर्नुबाट विवश हुनेछन् । अपराधीहरुसित तात्पर्य काफ़िर तथा मूर्तिपूजक हुन्, जस्तो कि आउने आयतबाट स्पष्ट छ ।

[3]साझीदारहरुसित तात्पर्य ती झूठा देवता हुन्, जसलाई मूर्तिपूजक यो ठानेर पूज्दथे कि यिनी अल्लाहकहाँ उनको सिफारिश गर्नेछन् तथा उनलाई अल्लाहको यातनाबाट बचाउनेछन् । तर यहाँ अल्लाहले स्पष्ट गरिदिए कि अल्लाहसँग साझीदार बनाउनेहरुका लागि अल्लाहकहाँ कोही सिफारिश गर्ने हुनेछैन ।

[4]अर्थात् त्यहाँ उनका देवता हुने कुरो नकार दिनेछन् किनकि उनीहरु देख्नेछन् कि यिनी त यहाँ कसैलाई कुनै लाभ पुऱ्याउनमा समर्थ छैनन् (फ़तहुल क़दीर) । दोस्रो अर्थ यो हो कि यी देवता यस कुरोलाई नकार दिनेछन् कि यिनीहरु उनीहरुलाई अल्लाहका साझीदार बनाएर पुज्दथे, किनकि उनी त उनको पूजासित नै अन्जान थिए ।

[5]यसबाट तात्पर्य प्रत्येक व्यक्तिको प्रत्येक व्यक्तिसित अलग हुने कुरो होइन बरु अर्थ ईमान भएकाहरु, क़ाफ़िरहरुसित अलग हुनु हो । ईमान भएका स्वर्गमा तथा काफ़िर एवं मूर्तिपूजक नरक़मा जानेछन् तथा उनका मध्ये स्थायी अलगाव हुनेछ र यी दुब

فَأَمَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فَهُمْ فِي رَوْضَةٍ يُحْبَرُونَ ⑮

(१५) अनि जो ईमान स्वीकार गरी सत्कर्म गर्दैरहे, उनीहरु त स्वर्गमा प्रसन्न गरिदिइने छन् ।[1]

وَأَمَّا الَّذِينَ كَفَرُوا وَكَذَّبُوا بِآيَاتِنَا وَلِقَاءِ الْآخِرَةِ فَأُولَٰئِكَ فِي الْعَذَابِ مُحْضَرُونَ ⑯

(१६) तथा जसले कुफ्र गरेका थिए तथा हाम्रा आयतहरुलाई तथा आख़िरतका मिलनलाई भ्रूठा ठहराएका थिए, उनी सबै यातनामा समातिएर उपस्थित गरिनेछन् ।[2]

فَسُبْحَانَ اللَّهِ حِينَ تُمْسُونَ وَحِينَ تُصْبِحُونَ ⑰

(१७) तसर्थ अल्लाह (तआला) को प्रशंसा गरिराख, जबकि तिमी सांयमकाल गर्दछौ र जब प्रात: गर्दछौ ।

وَلَهُ الْحَمْدُ فِي السَّمَاوَاتِ وَالْأَرْضِ وَعَشِيًّا وَحِينَ تُظْهِرُونَ ⑱

(१८) तथा सबै प्रशंसाहरुका योग्य आकाश तथा धर्तीमा त्यही छ, अपरान्ह तथा मध्यान्हका समय पनि यसको पवित्रताको वर्णन गर ।[3]

---

पुन: कहिले पनि एकत्रित हुनेछैन । यो हिसाबका पश्चात हुनेछ । यस अलगावको स्पष्टीकरण अगाडी आयतमा आइरहेछ ।

[1]अर्थात् उनीहरुलाई स्वर्गमा आदर एवं पुरस्कारले सम्मानित गरिनेछ, जसबाट उनीहरु भ्रन् अधिक प्रसन्न हुनेछन् ।

[2]अर्थात् सधैं अल्लाहको यातनामा घेरिएको हुनेछन् ।

[3]यो अल्लाह तआलाको तर्फबाट स्वयं आफ्नो पवित्र शक्तिका लागि महिमा एवं प्रशंसा हो, जसको उद्देश्य आफ्ना भक्तहरुको मार्गदर्शन हो कि यी समयमा जो एक-अर्काका पछि आउँछन् तथा जो त्यसको शक्ति एवं महानताको प्रदर्शन गर्दछन्, त्यसको महिमा एवं प्रशंसा गर्दैरह । सन्ध्याका समय, रात्रिका अन्धकारका उद्‌गम तथा प्रात:को श्वेतपना दिनका प्रकाशको द्योतक हो । ईशा, घन्घोर अन्धकारको तथा जोहर अत्यन्त प्रकाशको समय हो । त त्यो महान शक्ति हो जो यी सबैको स्रष्टा हो तथा जसले ती समस्त समयहरुमा विभिन्न लाभ राखेको छ । केही ज्ञाताहरु भन्दछन् प्रशंसासित तात्पर्य नमाज़ हो तथा दुबै आयतहरुमा वर्णित समय पाँच नमाज़हरुको समय हो تُمْسُونَ मा मग़रिब तथा ईशा, تُصْبِحُونَ मा फज्रको नमाज़, عَشِيًّا (अपरान्ह) मा अस्र तथा تُظْهِرُونَ मा ज़ोहरको नमाज़ आउँछ (फ़तहुल क़दीर) । एक क्षीण हदीसमा यी दुबै आयतहरुमा प्रात:-सायं पढ्नुको महत्व दिइएको छ कि यसबाट रात्रि-दिनका त्रुटिहरुको निराकरण हुनजान्छ । (अबू दाऊद किताबुल अदब, बाब मा यकूल इज़ा अस्बह)

يُخْرِجُ الْحَيَّ مِنَ الْمَيِّتِ وَيُخْرِجُ الْمَيِّتَ مِنَ الْحَيِّ وَيُحْيِ الْأَرْضَ بَعْدَ مَوْتِهَا ۚ وَكَذَٰلِكَ تُخْرَجُونَ ﴿١٩﴾

(१९) केही जीवितलाई मृतबाट निकाल्दछ[1] तथा मृतबाट जीवितलाई निकाल्दछ तथा केही धर्तीलाई त्यसको मृत पश्चात जीवित गर्दछ, यसैप्रकार तिमी (पनि) निकालिनेछौ ।[2]

وَمِنْ آيَاتِهِ أَنْ خَلَقَكُم مِّن تُرَابٍ ثُمَّ إِذَا أَنتُم بَشَرٌ تَنتَشِرُونَ ﴿٢٠﴾

(२०) तथा अल्लाहका निशानीहरुमध्ये हो कि तिमीलाई माटोबाट जन्म दियो कि त्यसपछि अब मनुष्य बनेर (घुमफिर गर्दै) विस्तारित भइराखेको छौ ।[3]

وَمِنْ آيَاتِهِ أَنْ خَلَقَ لَكُم مِّنْ أَنفُسِكُمْ أَزْوَاجًا لِّتَسْكُنُوا إِلَيْهَا وَجَعَلَ بَيْنَكُم مَّوَدَّةً وَرَحْمَةً ۚ

(२१) तथा त्यसका निशानीहरुमध्ये (यो) हो कि तिम्रै जातिबाट पत्नीहरुलाई पैदा गरे ।[4] ताकि तिमी उनीहरुबाट सुख पाउ[5], उसले तिमीहरु बीच

---

[1]जस्तै पोथीलाई अण्डाबाट, अण्डालाई पोथीबाट, मनुष्यलाई वीर्यबाट, वीर्यलाई मनुष्यबाट तथा ईमान भएकालाई काफ़िरबाट, काफ़िरलाई ईमान भएकाहरुबाट पैदा गर्दछ ।

[2]अर्थात चिहानहरुबाट पैदा गरेर ।

[3] إذا अकस्मातवाची हो । तात्पर्य यसबाट ती अवस्थाहरुतिर अंकित गर्नु हो जसबाट गुज्रेर बालक पूर्ण मनुष्य बन्दछ, जसको विस्तृत वर्णन कुर्आनमा अन्य स्थानहरुमा गरिएको छ । اَلنَّشْرُ बाट तात्पर्य मनुष्यको जीविकापार्जन गर्नु तथा अन्य आवश्यकताहरुका लागि घुमफिर गर्नु हो ।

[4]अर्थात् तिम्रै लिङ्ग (जाति) बाट स्त्रीहरुलाई पैदा गऱ्यो ताकि उनीहरु तिम्रा पत्नीहरु होऊन् र तिमी जोडा-जोडा होउ । زوج अरबी भाषामा जोडालाई भन्दछन् । यस आधारमा पुरुष, स्त्रीका लागि तथा स्त्री पुरुषका लागि जोडा हो । स्त्रीहरुका मानव लिङ्ग हुनुको अर्थ हो कि संसारकी प्रथम महिला आदरणीय हव्वालाई आदरणीय आदमको बायाँ पाशवबाट पैदा गरियो । अनि यी दुबैबाट मानवको वंशानुक्रम चल्यो ।

[5]अर्थ यो हो कि यदि पुरुष तथा महिलाको जाति एक-अर्काबाट भिन्न भएको भए उदाहरण स्वरुप, महिलाहरु जिन्नात अथवा पशुहरुमध्ये हुन्थे भने उनीहरुबाट त्यो शान्ति कहिल्यै प्राप्त हुने थिएन, जुन यस समय दुबै एउटै जाति हुनुका कारण प्राप्त छ । बरु एक-अर्कासित घृणा एवं भय हुन्थ्यो । यो अल्लाह तआलाको कृपा नै हो कि मनुष्यका पत्नीहरु मनुष्यहरु मध्येबाट नै बनायो ।

إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِقَوْمٍ يَتَفَكَّرُونَ ﴿٢١﴾

प्रेम तथा दयाभाव उत्पन्न गरिदियो,[1] निःसन्देह चिन्तन एवं विचार गर्नेहरुका लागि यसमा धेरै निशानीहरु (लक्षण) छन् ।

وَمِنْ آيَاتِهِ خَلْقُ السَّمَاوَاتِ وَالْأَرْضِ وَاخْتِلَافُ أَلْسِنَتِكُمْ وَأَلْوَانِكُمْ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِلْعَالِمِينَ ﴿٢٢﴾

(२२) तथा त्यसका (सामर्थ्य) का निशानीहरुमध्ये आकाशहरु एवं धर्तीको उत्पत्ति तथा भाषा एवं रङ्गहरुको विभिन्नता (पनि) हो,[2] बुद्धिमानीहरुका लागि अवश्य त्यसमा ठूला लक्षण छन् ।

---

[1] مَوَدَّةً यो हो कि पति, पत्नीसित अपार प्रेम गर्दछ तथा यस्तै पत्नी, पतिसित । जस्तो कि सामान्यरुपमा देखिएको छ । यस्तो प्रेम जो पति-पत्नीमा हुन्छ, संसारमा कुनै दुई व्यक्तिहरुका बीच हुँदैन । तथा कृपा यो हो कि पति, पत्नीलाई हरप्रकारको सुख-सुविधा उपलब्ध गराउँछ, जसको प्रभारी त्यसलाई अल्लाह तआलाले बनाएको छ तथा यस्तै पत्नी पनि आफ्नो शक्ति एवं अधिकारको परिधिमा । तैपनि मनुष्यलाई यो शान्ति तथा पारस्परिक प्रेम तिनै जोडीहरुबाट प्राप्त हुन्छ, जो धार्मिक नियमहरुका अनुसार वैवाहिक बन्धनसित स्थापित हुन्छन् तथा इस्लाम धर्म उनीहरुलाई जोडीको मान्यता दिन्छ । अवैधानिक जोडीहरुलाई त्यो जोडी नै मान्दैन, बरु उनलाई व्यभिचारी एवं बलत्कारी मान्दछ तथा उनका लागि कठोर दण्ड निर्धारित गर्दछ । आजकल पाश्चात्य सभ्यताका प्रचारक शैतानको भाई यस प्रयत्नमा लिप्त छन् कि पाश्चात्य सभ्यताको जस्तै इस्लामिक राष्ट्रहरुमा पनि विवाहलाई अनावश्यक घोषित गरी व्यभिचारी पुरुष-महिलाको युगलको मान्यता दिइयोस् तथा उनलाई दण्डको साटो कि अधिकार प्राप्त होऊन् जो एउटा वैधानिक जोडीहरुबाट प्राप्त हुन्छन् ।

[2] संसारमा यति भाषाहरुका उत्पत्ति पनि अल्लाह तआलाका सामर्थ्यको एउटा ठूलो प्रतीक हो : अरबी छ, तुर्की छ, अंग्रजी छ, उर्दू छ, हिन्दी छ, पशतो, फ़ारसी, सिन्धी, बलूची, तमिल, तेलगू एवं बंङ्गला आदि छन् । अनि एक-एक भाषाका विभिन्न स्वर तथा शैलीहरु छन् । एउटा मनुष्य आफ्नो भाषा तथा उच्चारणका कारण लाखौंको भीडमा चिनिन्छ कि अमूक देशको अमूक क्षेत्रको निवासी हो । केवल भाषा नै उसको पूर्ण परिचय गराईदिन्छ । यसैप्रकार एउटै माता-पिता (आदम तथा हव्वा) बाट हुनुका उपरान्त पनि रङ्ग एक-अर्काबाट भिन्न छन् । कोही काला छ, कोही गोरा छ त कोही गहुँ रङ्गको । अनि काला तथा गोरा रङ्गमा पनि यति श्रेणीहरु छन् कि अधिकतर आवादी दुई रङ्गहरुमा विभक्त हुनुका उपरान्त पनि उसका विभिन्न प्रकार छन्, तथा एक-अर्कासित पूर्णरुपले भिन्न तथा अलग । अनि उनका मुखका बनावट, शारीरिक रचना तथा आकारमा यस्तो अन्तर राखिदिइएको छ

وَمِنْ اٰيٰتِهٖ مَنَامُكُمْ بِالَّيْلِ وَالنَّهَارِ وَابْتِغَاۤؤُكُمْ مِّنْ فَضْلِهٖ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّسْمَعُوْنَ ﴿٢٣﴾

(२३) तथा (अन्य पनि) उसका (सामर्थ्य) का निशानीहरु तिम्रो रात्रि एवं दिनको निद्रामा छ तथा त्यसको उपकार (अर्थात् जीविका) लाई तिम्रो खोज्नु (पनि) हो ।[1] जो मानिस कान थापेर सुन्नेछन् उनका लागि यसमा ठूला निशानीहरु छन् ।

وَمِنْ اٰيٰتِهٖ يُرِيْكُمُ الْبَرْقَ خَوْفًا وَّطَمَعًا وَّيُنَزِّلُ مِنَ السَّمَاۤءِ مَاۤءً فَيُحْيٖ بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّعْقِلُوْنَ ﴿٢٤﴾

(२४) तथा उसका निशानीहरुमध्ये एउटा निशानी यो पनि हो कि त्यो तिमीलाई तर्साउन तथा आशावान बनाउनका लागि तडित (चट्याङहरु) देखाउँछ,[2] तथा आकाशबाट बृष्टि गर्दछ, तथा त्यसबाट मृत धर्तीलाई जीवित गर्दछ, यसमा (पनि) बुद्धिमानीहरुका लागि ठूला निशानीहरु छन् ।

وَمِنْ اٰيٰتِهٖۤ اَنْ تَقُوْمَ السَّمَاۤءُ وَالْاَرْضُ بِاَمْرِهٖ ؕ ثُمَّ اِذَا دَعَاكُمْ

(२५) तथा त्यसको एउटा निशानी यो पनि हो कि आकाश तथा धर्ती त्यसका आदेशले स्थापित छन्, अनि त्यसले जब तिमीलाई आवाज दिनेछ, केवल

कि एक-एक देशको व्यक्ति अलगबाट चिनिन्छ । अर्थात् यस कुराका उपरान्त कि एक व्यक्ति अर्को व्यक्तिसित समान हुँदैन, यहाँसम्मकि एक भाइ अर्को भाइसित भिन्न छ तर अल्लाहका सामर्थ्यको चमत्कार हो कि तैपनि कुनै एउटा देशका निवासी अर्को देशका निवासीभन्दा भिन्न हुन्छन् ।

[1]निद्रा, सुख एवं शान्तिको कारण हुनु चाहे, त्यो रात्रिको होस् अथवा दिनको विश्रामको समय होस्, तथा दिनको व्यापार एवं कार्यद्वारा अल्लाहको कृपाको खोज गर्नु, यो विषय कैयन् स्थानमा गुज्रिसकेको छ ।

[2]अर्थात् आकाशमा बिजुलीको चमक तथा मेघहरुको गर्जनसित त तिमी भयभीत पनि हुन्छौ कि कहीं बिजुली (चट्याङ) नखसोस् अथवा अधिक वर्षा नहोस् कि खेतीहरु क्षतिग्रस्त हुन पुगुन् तथा आशाहरु पनि राख्दछौ कि वर्षा हुन्छ भने उब्जनी राम्रो हुनेछ ।

دَعۡوَةٗ مِّنَ ٱلۡأَرۡضِ إِذَآ أَنتُمۡ تَخۡرُجُونَ ٢٥

एक पटक कै आवाजबाट तिमी सबै धर्तीबाट निस्केर आउनेछौ ।[१]

وَلَهُۥ مَن فِي ٱلسَّمَٰوَٰتِ وَٱلۡأَرۡضِۖ كُلّٞ لَّهُۥ قَٰنِتُونَ ٢٦

(२६) तथा आकाश एवं धर्तीका समस्त वस्तुहरुको त्यही स्वामी हो तथा प्रत्येक त्यसका आदेशका अधीन छन् ।[२]

وَهُوَ ٱلَّذِي يَبۡدَؤُاْ ٱلۡخَلۡقَ ثُمَّ يُعِيدُهُۥ وَهُوَ أَهۡوَنُ عَلَيۡهِۚ وَلَهُ ٱلۡمَثَلُ ٱلۡأَعۡلَىٰ فِي ٱلسَّمَٰوَٰتِ وَٱلۡأَرۡضِۚ وَهُوَ ٱلۡعَزِيزُ ٱلۡحَكِيمُ ٢٧

(२७) तथा त्यही हो जो प्रथम पटक सृष्टिलाई उत्पन्न गर्दछ, त्यही फेरिबाट पुनः पैदा गर्नेछ तथा यो कुरो त उसलाई अत्यन्त सरल छ । उसैको उत्तम तथा उच्च विशेषता हो[३] आकाशहरुमा तथा धर्तीमा पनि, त्यही प्रभावशाली, सर्वज्ञानी छ ।

ضَرَبَ لَكُم مَّثَلٗا مِّنۡ أَنفُسِكُمۡۖ هَل لَّكُم مِّن مَّا مَلَكَتۡ أَيۡمَٰنُكُم مِّن شُرَكَآءَ فِي مَا رَزَقۡنَٰكُمۡ فَأَنتُمۡ فِيهِ سَوَآءٞ تَخَافُونَهُمۡ كَخِيفَتِكُمۡ

(२८) अल्लाह तआलाले एक उदाहरण स्वयं तिम्रो नै वर्णन गर्‍यो, जे-जति हामीले तिमीलाई प्रदान गरेका छौं के त्यसमा तिम्रा दासहरुमध्ये कोही तिम्रो साझेदार छौ कि तिमी तथा त्यो त्यसमा समान पदका छौ ?[४] तथा तिमी

[१]अर्थात् प्रलय जब व्याप्त हुनेछ आकाश एवं धर्तीको सारा प्रबन्ध, जो यस समय त्यसका आदेशबाट स्थापित छ, क्षत-विक्षत हुनेछ तथा समस्त मनुष्य चिहानहरुबाट जीवित भई बाहिर निस्कनेछन् ।

[२]अर्थात् त्यसका सृजन आदेशका समक्ष सबै असहाय तथा विवश छन्, जस्तो जीवन-मृत्यु, स्वास्थ्य एवं रोग, मान-अपमान आदिमा ।

[३]अर्थात् यति गुणहरु एवं महान सामर्थ्यको स्वामी, समस्त तुलनाहरुबाट महान एवं उच्च छ ।

لَيۡسَ كَمِثۡلِهِۦ شَيۡءٞۖ

"उहाँ जस्तो कोही छैन ।" (सूर: शूरा-११)

[४]अर्थात् जब तिमीलाई यो प्रिय छैन कि तिम्रा दास एवं कर्मचारी गण, जो तिमी समान नै सामान्य मनुष्य छन्, उनीहरु तिम्रा धन-दौलतका साझेदार तथा तिमी समान होऊन् त फेरि त्यो कसरी हुनसक्छ कि अल्लाहका दास (भक्त), चाहे

أَنفُسَكُمْ ۚ كَذَٰلِكَ نُفَصِّلُ الْآيَاتِ لِقَوْمٍ يَعْقِلُونَ ﴿٢٨﴾

उनको भय यसप्रकार गर्दछौ जस्तो कि आफन्तीहरुको,[1] हामी बुद्धिमानहरुका लागि यसैप्रकार स्पष्ट रुपमा आयतहरु बयान गर्दछौं ।[2]

بَلِ اتَّبَعَ الَّذِينَ ظَلَمُوا أَهْوَاءَهُم بِغَيْرِ عِلْمٍ ۖ فَمَن يَهْدِي مَنْ

(२९) वास्तविक कुरो यो हो कि यी अत्याचरी बिना ज्ञानका[3] इन्द्रियहरुका वशीभूत हुन्, त्यसलाई कसले मार्ग देखाउन सक्छ जसलाई अल्लाहले मार्गबाट

उनीहरु फरिश्ता होऊन्, सन्देष्टा होऊन्, महापुरुष होऊन् अथवा वृक्ष एवं ढुङ्गाबाट बनाइएका देवता, उनीहरु अल्लाहका साभ्रीदार हुन सकून्, जबकि उनीहरु पनि अल्लाहका दास हुन् तथा त्यसका सृष्टि हुन् । अर्थात जुनप्रकार प्रथम कुरो हुनसक्दैन दोस्रो पनि हुन सक्दैन । यसकारण अल्लाहका साथ अरुहरुको पनि पूजा गर्नु तथा उनीहरुलाई पनि कष्टनिवारक तथा संकट-मोचन ठान्नु सर्वथा गलत हो ।

[1]अर्थात् के तिमी आफ्ना दासहरुसित यसप्रकार भयभीत हुन्छौ, जुनप्रकार तिमी (स्वतन्त्र मानिसहरु) आपसमा एक-अर्कासित भयभीत हुन्छौ । अर्थात् जुनप्रकार साभ्राका व्यापारमा अथवा सम्पत्ति मध्येबाट खर्च गर्दाखेरि भय प्रतीत हुन्छ कि अन्य साभ्रीदार सोध्नेछन् के तिमी आफ्ना दाससित त्यसैप्रकार भयभीत हुन्छौ ? अर्थात् भयभीत हुँदैनौ किनकि तिमी उनीहरुलाई धन-दौलतमा साभ्रेदार बनाएर आफ्नो सामान बनाउनै सक्दैनौ, त उनीसित भय पनि कस्तो ?

[2]किनकि उनीहरु आफ्नो बुद्धिको प्रयोग गरी तथा चिन्तन-मनन गरी अवतरित तथा उत्पत्तिका आयतहरुबाट लाभ प्राप्त गर्दछन् तथा जो यस्ता गर्दैनन् उनको समभ्रमा एकेश्वरवादको कुरा पनि आउँदैन, जो अत्यन्त स्वच्छ एवं अत्यन्त स्पष्ट छ ।

[3]अर्थात् यस वास्तविकताको उनीहरुलाई बोध पनि छैन कि उनीहरु ज्ञानबाट शून्य तथा पथभ्रष्टताका शिकार छन् तथा यसै अज्ञानता तथा पथभ्रष्टतामा परी उनी आफ्नो बुद्धिको प्रयोग गर्ने क्षमता पनि राख्दैनन् तथा आफ्ना इन्द्रियहरुका इच्छा एवं भ्रष्ट विचारहरुका अनुयायी छन् ।

أَضَلَّ اللَّهُ ۖ وَمَا لَهُم مِّن نَّاصِرِينَ ﴿٢٩﴾

हटाइदिन्छन् ?[1] उनलाई कोही पनि सहायता गर्नेछैन ।[2]

فَأَقِمْ وَجْهَكَ لِلدِّينِ حَنِيفًا ۚ فِطْرَتَ اللَّهِ الَّتِي فَطَرَ النَّاسَ عَلَيْهَا ۚ لَا تَبْدِيلَ لِخَلْقِ اللَّهِ ۚ ذَٰلِكَ الدِّينُ الْقَيِّمُ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿٣٠﴾

(३०) त तपाईं एकाग्र भई आफ्नो मुख धर्मतिर केन्द्रित गरिदिनु ।[3] अल्लाह (तआ़ला) को त्यो प्राकृतिको अनुसरण गर जसमा उसले मानिसहरुलाई पैदा गरेको छ ।[4] अल्लाहद्वारा बनाइएको संरचना परिवर्तित गर्न सकिंदैन,[5] यही सत्य धर्म हो,[6] परन्तु अधिकतर मानिसहरु जान्दैनन् ।[7]

---

[1]किनकि अल्लाहको तर्फबाट मार्गदर्शन उसैलाई प्राप्त हुन्छ, जसमा सन्मार्ग प्राप्त गर्नुको इच्छा तथा कामना हुन्छ, जो यस सत्य इच्छाबाट बञ्चित हुन्छन् उनीहरुलाई पथभ्रष्टताको अवस्थामा छाडिदिन्छ ।

[2]अर्थात् यी कुमार्ग मानिसहरुको कोही सहायता गर्ने हुँदैन जो यिनीहरुलाई सत्यमार्गको दर्शन गराउन सकोस् अथवा उनीबाट यातना हटाउन सकोस् ।

[3]अर्थात् अल्लाहको एकता तथा त्यसको इबादतमा दृढ रहनु एवं झूठा कल्पित धर्महरुतिर आकर्षित नहुनु ।

[4]فِطـرت को वास्तविक अर्थ सृजन (जन्म) हो । यहाँ तात्पर्य इस्लाम धर्म (एवं एकेश्वरवाद) हो । अर्थ यो हो कि सबैको जन्म धर्मी एवं विधर्मीको भेद बिना इस्लाम एवं एकेश्वरवादमा हुन्छ, यसकारण एकेश्वरवाद उनको प्राकृति एवं संस्कारमा सम्मिलित छ, जस्तो कि أَلَسْـتُ को वचनबाट स्पष्ट छ । तत्पश्चात धेरैजसोलाई वातावरण अथवा अन्य कारण, प्रकृतिको त्यस पुकारतिर आउन दिंदैनन्, जसको कारण उनीहरु कुफ्रमा नै शेष रहन्छन्, जुनप्रकार नबी सल्लल्लाहु अलैहि वसल्लमको हदीस (कथन) छ, "प्रत्येक शिशु प्राकृतिमा जन्म लिन्छ, परन्तु त्यसपछि त्यसका माता-पिता त्यसलाई यहूदी, इसाई एवं अग्निपूजक बनाइदिन्छन् ।" (सहीह बुख़ारी तफ़सीर सूर: रूम, मुस्लिम किताबुल क़द्र, बाब कुल्लो मौलूदिन, यूलदु अलल फ़ितरते)

[5]अर्थात् अल्लाहको सृष्टि (प्रकृति) लाई परिवर्तित नगर, बरु उचित शिक्षाद्वारा त्यसको पालन-पोषण गर ताकि ईमान एवं एकेश्वरवाद बालकहरुका मन-मस्तिष्कमा सुदृढ हुन जाओस् । यो विधेय (आदेश) माँगको अर्थमा छ अर्थात् नकारात्मक रोक्नको अर्थमा छ ।

[6]अर्थात् त्यो धर्म जसतिर एकाग्रता एवं आकर्षित हुनुको आदेश छ, अथवा जो प्राकृतिको माँग, त्यही नै सोझो सत्य धर्म हो ।

[7]यसैकारण उनीहरु इस्लाम तथा एकेश्वरवादबाट अनभिज्ञ रहन्छन् ।

مُنِيبِينَ إِلَيْهِ وَاتَّقُوهُ وَأَقِيمُوا الصَّلَاةَ وَلَا تَكُونُوا مِنَ الْمُشْرِكِينَ ﴿٣١﴾

(३१) (मानिसहरु), अल्लाह तआलातिर आकर्षित भई उसित तर्सने गर तथा नमाज़लाई स्थापित राख तथा मूर्तिपूजकहरु मध्येको नहोउ ।[1]

مِنَ الَّذِينَ فَرَّقُوا دِينَهُمْ وَكَانُوا شِيَعًا كُلُّ حِزْبٍ بِمَا لَدَيْهِمْ فَرِحُونَ ﴿٣٢﴾

(३२) ती मानिसहरुमध्ये जसले आफ्ना धर्मलाई क्षत-विक्षत गरिदिए तथा स्वयं पनि गुटहरुमा विभाजित भए,[2] प्रत्येक गुट त्यस वस्तुमाथि जो उसित छ दङ्ग छ ।[3]

وَإِذَا مَسَّ النَّاسَ ضُرٌّ دَعَوْا رَبَّهُم مُّنِيبِينَ إِلَيْهِ ثُمَّ إِذَا أَذَاقَهُم مِّنْهُ رَحْمَةً إِذَا فَرِيقٌ مِّنْهُم بِرَبِّهِمْ يُشْرِكُونَ ﴿٣٣﴾

(३३) तथा मानिसहरुलाई जब कुनै दुख पुग्दछ, त आफ्नो प्रभुतिर (पूर्ण) एकाग्रताको प्रार्थना गर्दछन् तथा जब त्यसले आफ्नो तर्फबाट दयाको स्वाद चखाइदिन्छ, त उनीहरु मध्येको एउटा गुट आफ्नो प्रभुसँग शिर्क गर्नथाल्छन् ।

لِيَكْفُرُوا بِمَا آتَيْنَاهُمْ فَتَمَتَّعُوا

(३४) ताकि उनीहरुले त्यस वस्तुको कृतघ्नता व्यक्त गरून् जो हामीले उनीहरुलाई प्रदान गरेका छौं,[4] त्यसो भए,

[1]अर्थात् ईमान तथा अल्लाहका भय एवं नमाज़ स्थापित गर्नुबाट इन्कार गरी मूर्तिपूजकहरु मध्येको नहोउ ।

[2]अर्थात् मूल धर्मलाई छाडेर अथवा त्यसमा ऐच्छिक परिवर्तन गरेर विभिन्न गुटहरुमा विभाजित भए, जस्तो कोही यहूदी, कोही इसाई, कोही मूर्तिपूजक आदि भयो ।

[3]अर्थात् प्रत्येक गुट एवं गिरोह यो ठान्दछ कि त्यो सत्यमा छ तथा अन्य झूठा, तथा जुन सहाराहरु उनीहरुले खोजेका छन्, जसलाई उनीहरु तर्क एवं प्रमाण भन्दछन्, उनीमाथि प्रसन्न तथा निश्चिन्त छन् । दुर्भाग्यले इस्लामी समुदायको पनि यही दशा भयो कि उनी पनि विभिन्न गुटहरुमा विभाजित भए तथा उनका पनि प्रत्येक गुट यसै असत्य विश्वासमा दृढ छ कि त्यो सत्यमा छ, जबकि सत्यमा केवल एउटै गुट छ जसको पहिचान नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएछ कि "मेरो तथा मेरा सहाबाका मार्गमा हिंड्नेवाला हुनेछ ।" (सहीह हदीस, बुख़ारी)

[4]यो त्यही विषय हो जुन सूरः अनकबूतको अन्तमा गुज्रिसकेको छ ।

فَسَوْفَ تَعْلَمُونَ ۝٣٤

तिमी लाभ उठाउ, अति शीघ्र तिमीलाई ज्ञात हुनेछ

أَمْ أَنزَلْنَا عَلَيْهِمْ سُلْطَانًا فَهُوَ يَتَكَلَّمُ بِمَا كَانُوا بِهِ يُشْرِكُونَ ۝٣٥

(३५) के हामीले उनीमाथि कुनै प्रमाण अवतरित गरेका छौं, जो त्यसलाई वर्णन गर्दछ जसलाई यिनीहरु अल्लाहसँग साझेदार बनाइराखेका छन् ।[1]

وَإِذَا أَذَقْنَا النَّاسَ رَحْمَةً فَرِحُوا بِهَا ۖ وَإِن تُصِبْهُمْ سَيِّئَةٌ بِمَا قَدَّمَتْ أَيْدِيهِمْ إِذَا هُمْ يَقْنَطُونَ ۝٣٦

(३६) तथा जब हामी मानिसरुहरुलाई दयाको स्वाद चखाउँछौं, त उनीहरु अति प्रसन्न हुन्छन् तथा यदि उनीरुहरुलाई आफ्नै हातका कर्तुतका कारण कुनै दुख पुग्दछ, त सहसा उनीहरु निराश हुन पुग्दछन् ।[2]

أَوَلَمْ يَرَوْا أَنَّ اللَّهَ يَبْسُطُ الرِّزْقَ لِمَن يَشَاءُ وَيَقْدِرُ ۚ إِنَّ فِي ذَٰلِكَ

(३७) के उनीहरुले यो देखेनन् कि अल्लाह (तआला) जसलाई चाहन्छ असीम जीविका प्रदान गर्दछ तथा जसलाई चाहन्छ कम,[3] यसमा पनि ती

---

[1]यो प्रश्न इन्कारका लागि छ । अर्थात् उनीहरु जसलाई अल्लाहका साझेदार भन्दछन् तथा यिनीहरुको पूजा गर्दछन्, यो अप्रमाणित छ । अल्लाहले यसको कुनै प्रमाण अवतरित गरेको छैन । प्रष्ट छ अल्लाह तआलाले मूर्तिपूजा एवं शिर्कका पक्षमा तर्क कसरी अवतरित गर्न सक्दथ्यौ, जबकि उसले सबै सन्देष्टा यसैकारण पठाएको थियो कि उनीहरुले शिर्कको खण्डन तथा एकेश्वरवादको प्रचार गरून् । अतः प्रत्येक सन्देष्टाले सर्वप्रथम आफ्नो समुदायलाई एकेश्वरवादको सन्देश सुनायो । तथा आज एकेश्वरवादमा आस्था राख्नेहरुलाई नामका मुसलमानहरुमा एकेश्वरवाद एवं सुन्नतको उपदेश गर्न परिराखेको छ किनकि मुसलमान समुदायका बहुसंख्यक शिर्क एवं विदअतमा लिप्त छन् ।

[2]यो त्यही विषय हो जो सूरः हूदमा गुज्रिसकेको छ तथा जो मनुष्यहरुको बहुसंख्यकको कर्म हो कि सुखमा उनीहरु गर्व एवं अंहकारमा मस्त रहन्छन् तथा दुखमा निराश हुन्छन् । परन्तु ईमान भएकाहरु यसबाट अलग छन्, किनकि उनीहरु दुखमा संयम तथा सुखमा अल्लाहको कृतज्ञता व्यक्त गर्दछन् अर्थात पुण्यका कार्य गर्दछन् । यसप्रकार दुवै स्थितिमा उनीहरुलाई पुण्य एवं उत्तम प्रतिफल प्राप्त हुन्छ ।

[3]अर्थात् आफ्नो योजना एवं ज्ञानले त्यो कसैलाई धन अधिक तथा कसैलाई कम दिन्छ । यहाँसम्मकि कैयन् पटक बुद्धि एवं समझमा एवं प्रत्यक्ष कारणहरु तथा साधनहरुमा दुई मनुष्य एउटै जस्तो प्रतीत हुन्छन्, एउटै जस्तो व्यापार पनि प्रारम्भ गर्दछन् । परन्तु एउटाका व्यापार अधिक उन्नति गर्दछ

لَاٰيٰتٍ لِّقَوۡمٍ يُّؤۡمِنُوۡنَ ﴿٣٧﴾

मानिसहरुका लागि जो ईमान स्वीकार गर्दछन्, निशानीहरु छन् ।

فَاٰتِ ذَا الۡقُرۡبٰى حَقَّهٗ وَالۡمِسۡكِيۡنَ وَابۡنَ السَّبِيۡلِ ؕ ذٰلِكَ خَيۡرٌ لِّلَّذِيۡنَ يُرِيۡدُوۡنَ وَجۡهَ اللّٰهِ ۖ وَاُولٰٓئِكَ هُمُ الۡمُفۡلِحُوۡنَ ﴿٣٨﴾

(३८) तसर्थ निकट सम्बन्धीलाई, निर्धनलाई, यात्रीलाई, प्रत्येकलाई त्यसको अधिकार देउ,[1] यो उनका लागि श्रेष्ठ छ, जो अल्लाह (तआला) को मुखको दर्शन गर्न चाहन्छन्,[2] यस्ता मानिसहरु नै मोक्ष प्राप्त गर्नेहरु हुन्छन् ।

وَمَاۤ اٰتَيۡتُمۡ مِّنۡ رِّبًا لِّيَرۡبُوَا۟ فِىۡۤ اَمۡوَالِ النَّاسِ فَلَا يَرۡبُوۡا عِنۡدَ اللّٰهِ ۚ

(३९) तथा तिमी जो ब्याजमा दिन्छौ कि मानिसहरुका मालमा बृद्धि भइराखोस्, त्यो अल्लाह (तआला) कहाँ बढ्दैन,[3] तथा जे-जति

तथा त्यसको अत्याधिक लाभ हुन्छ, जबकि अर्कोको ब्यापार सीमित नै रहन्छ तथा त्यसलाई उन्नति प्राप्त हुँदैन । आखिर त्यो कुन अस्तित्व हो, जसको पासमा समस्त अधिकार छ तथा यसप्रकारका कार्य गर्दछ । यसका अतिरिक्त त्यो कहिले धनवानलाई निर्धन तथा निर्धनलाई धनवान बनाईदिन्छ । यो सबै त्यसै अल्लाहको हातमा छ, जसको कोही साझेदार छैन ।

[1]जब जीविकाका समस्त साधन अल्लाहकै अधिकारमा छन् तथा त्यो जसलाई चाहन्छ त्यसका लागि त्यसका ढोका खोलिदिन्छ, तसर्थ धनवानहरुलाई आवश्यक छ कि उनीहरु अल्लाहद्वारा दिइएका माल मध्येबाट त्यसको त्यो अधिकार तिर्दैगरून्, जो उनका मालमा उनको अधिकारी निकट सम्बन्धी, निर्धन तथा यात्रीहरुका लागि राखिएको छ । निकट सम्वन्धिहरुको अधिकार यसकारण प्रथम राखिएको छ कि यसको महत्व अधिक छ । हदीसमा वर्णित छ कि निर्धन सम्बन्धीसँग उपकार गर्नु दुई गुना पुण्यको कारण हो, एउटा दानको पुण्य तथा दोस्रो सम्बन्ध जोड्नुको । यसका अतिरिक्त यहाँ त्यसलाई अधिकार भनेर यस कुरातिर संकेत गरिएको छ कि उनको सहायता गरेर तिमी उपकार गर्न छैनौ, बरु एउटा अधिकारकै पूर्ति गर्नेछौ ।

[2]अर्थात् स्वर्गमा त्यसको साक्षात दर्शनको सौभाग्य प्राप्त गर्नु ।

[3]अर्थात् ब्याजबाट प्रत्यक्ष रुपले बृद्धि त देखिन्छ तर वास्तवमा यस्तो हुँदैन, बरु त्यसको दुर्भाग्य अन्तमा यस लोक तथा परलोकमा विनाशको कारण हो । आदरणीय इब्ने अब्बास एवं विभिन्न सहाबा तथा ताबईनले यस आयतमा ربا सित तात्पर्य ब्याज होइन, बरु त्यो उपहार लिएका छन् जो कोही निर्धन धनवानलाई अथवा जनताको कोही व्यक्ति राजा अथवा राजाका अधिकारीलाई अथवा एउटा सेवक आफ्नो स्वामीलाइ

وَمَآ اٰتَيۡتُمۡ مِّنۡ زَكٰوةٍ تُرِيۡدُوۡنَ وَجۡهَ اللّٰهِ فَاُولٰٓـئِكَ هُمُ الۡمُضۡعِفُوۡنَ ﴿۳۹﴾

(दान एवं) ज़कात तिमी अल्लाह (तआ़ला) को मुखका दर्शनका लागि देउ, त यस्ता मानिसहरु नै आफ्ना (माल) बृद्धि गर्नेहरु हुन् ।[1]

اَللّٰهُ الَّذِىۡ خَلَقَكُمۡ ثُمَّ رَزَقَكُمۡ ثُمَّ يُمِيۡتُكُمۡ ثُمَّ يُحۡيِيۡكُمۡ‌ؕ هَلۡ مِنۡ شُرَكَآئِكُمۡ مَّنۡ يَّفۡعَلُ مِنۡ ذٰ لِكُمۡ مِّنۡ شَىۡءٍ‌ ؕ سُبۡحٰنَهٗ وَتَعٰلٰى عَمَّا يُشۡرِكُوۡنَ ﴿۴۰﴾

(४०) अल्लाह (तआ़ला) त्यो हो जसले तिमीलाई पैदा गऱ्यो, अनि जीविका प्रदान गऱ्यो, त्यस पश्चात मार्नेछ, पुन: जीवित गर्नेछ, भन, तिम्रा साझीदारहरुमध्ये कोही यस्तो पनि छ जो यिनीहरुमध्ये केही पनि गर्न सक्दछ । अल्लाह (तआ़ला) का लागि पवित्रता एवं श्रेष्ठता छ पत्येक त्यस साझीदारभन्दा जो यिनीहरु रच्दछन् ।

ظَهَرَ الۡفَسَادُ فِى الۡبَرِّ وَالۡبَحۡرِ بِمَا كَسَبَتۡ اَيۡدِى النَّاسِ لِيُذِيۡقَهُمۡ بَعۡضَ الَّذِىۡ عَمِلُوۡا لَعَلَّهُمۡ يَرۡجِعُوۡنَ ﴿۴۱﴾

(४०) जल-थलमा मानिसहरुका कुकर्महरुका कारण उपद्रव फैलियो, यसकारण कि उनीहरुलाई उनका केही कर्तुतहरुका फल अल्लाह (तआ़ला) चखाइदेओस्, (अति) सम्भव छ कि उनीहरु रोकियून् ।[2]

---

यस विचारले दिन्छ कि त्यसले त्यसको सट्टामा त्यसभन्दा अधिक दिनेछ । ربا त्यसलाई यसकारण भनिएको छ कि दिंदाखेरि अधिकताको ध्यान हुन्छ । यो यद्यपि उचित छ तैपनि अल्लाहकहाँ यसको प्रतिफल पाइने छैन, " فلا يربو عند الله " बाट त्यसै पारलौकिक प्रतिफलको खण्डन हुन्छ । यस आधारमा अनुवाद हुनेछ "जो तिमी उपहार दिन्छौ यस विचारले कि फिर्ताको स्थितिमा अधिक प्राप्त होस्, त अल्लाहकहाँ त्यसको पुण्य छैन ।" (इब्ने क़सीर, ऐसरुत्तफासीर)

[1]ज़कात एवं दानले एक त आध्यात्मिक एवं अन्त: बृद्धि हुन्छ अर्थात् शेष मालमा अल्लाहको तर्फबाट बिभूति हालिन्छ । अर्को, क़्यामत (प्रलय) का दिन त्यसको प्रतिफल एवं पुण्य कैयन् गुना बृद्धि भई प्राप्त हुनेछ, जुनप्रकार हदीसमा वर्णित छ कि हलाल (सर्वधार्मिक) कमाईबाट एक ख़जूरका बराबर दान बढेर ओहुद पर्वतका समान हुनेछ । (सहीह मुस्लिम किताबुज़ ज़कात)

[2]फलसित तात्पर्य मानव वस्तीहरु तथा जलसित तात्पर्य समुद्र एवं समुद्रिक मार्ग तथा समुद्रका किनारहरुका आवादिहरु हुन् । उपद्रवसित तात्पर्य प्रत्येक त्यो विवाद हो जसबाट मनुष्यका समाज एवं वस्तीहरुमा शान्ति-व्यवस्था अस्त-व्यस्त तथा उनका सुख-चैनमा रुकावट उत्पन्न होस् । यसकारण यो लागू हुनु पाप एवं नराम्रा कुराहरुमाथि पनि उचित छ कि मनुष्य एक-अर्कामाथि

قُلْ سِيْرُوْا فِي الْاَرْضِ فَانْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِيْنَ مِنْ قَبْلُ ۭ كَانَ اَكْثَرُهُمْ مُّشْرِكِيْنَ ۝

(४२) तपाईं भनिदिनुस्, धर्तीमा डुलेर त हेर कि पूर्वकालिक मानिसहरुको परिणाम के भयो जसमा अधिकतर मानिसहरु मूर्तिपूजक थिए ।

فَاَقِمْ وَجْهَكَ لِلدِّيْنِ الْقَيِّمِ مِنْ قَبْلِ

(४३) त तपाईं आफ्नो मुख त्यस सोझो एवं सत्य धर्मतिर नै राख्नुस्, यसभन्दा पूर्व कि त्यो दिन

अत्याचार गरिराखेका छन्, अल्लाहद्वारा निर्धारित गरिएका सीमाहरुको उल्लंघन गरिराखेका छन् तथा सामाजिक निगमहरुलाई भङ्ग गरिराखेका छन् तथा हत्या एवं लुटमार अधिक भएको छ तथा ती आकाश एवं धर्तीका प्रकोपमाथि पनि यो उचित रुपमा लागू हुनसक्छ, जो अल्लाहको तर्फबाट दण्ड एवं सचेत गर्नका लागि हुन्छ जस्तै अकाल, मृत्युको अधिकता, भय एवं बाढी आदि । अर्थ यो हो कि जब मनुष्य अल्लाहका आदेशहरुको अवज्ञालाई आफ्नो ध्येय बनाउँछ त त्यसपछि कर्महरुका प्रतिफलमा अल्लाह तआ़लाको तर्फबाट मनुष्यका कर्म एवं क्रियाकलापको मुख नराम्रो कुरातिर फर्कन्छ तथा धर्तीमा उपद्रव फैलन्छ । शान्ति-व्यवस्था भङ्ग हुन्छ र त्यसको स्थानमा भय एवं आतङ्क, चोरी, डकैती, हत्या एवं लुटमार सामान्य हुनजान्छ तथा यसका साथै कैयन् पटक आकाश एवं धर्तीबाट सम्बन्धित प्रकोप पनि आउँछ । उद्देश्य यो हुन्छ कि यस सामान्य बिगाड तथा दैवी प्रकोपलाई देखेर सम्भवतः मानिस पापहरुबाट रोकियून्, क्षमा माँगून् तथा उनको ध्यान अल्लाहतिर जाओस् ।

यसका विपरीत जुन समाजको व्यवस्था अल्लाहका आदेशहरुको अनुरुप हुन्छ तथा अल्लाहका नियम लागू हुन्छन्, अन्यायका स्थानमा न्यायको प्रचलन हुन्छ, यहाँ शान्ति-व्यवस्था तथा अल्लाहको तर्फबाट सुख-सुविधाको बाहुल्यता हुन्छ । जुनप्रकार एक हदीसमा वर्णित छ "धर्तीमा अल्लाहका एक नियमलाई लागू गर्नु त्यहाँका मानिसहरुका लागि चालीस दिनको वर्षाभन्दा श्रेष्ठतम् छ ।" (अल-नसाई, किताबु कतअे यदिस्सारिक बाबुत तरग़ीब फ़ी एकामतिल हद्द व इब्ने माजा) त्यसैप्रकार यो हदीस छ "जब एउटा कुकर्मी (फ़ाजिर) मनुष्यको मृत्यु हुन्छ त मनुष्य मात्र नै त्यसबाट सुखको अनुभूति गर्दैन, नगर पनि वृक्ष एवं पशु पनि सुख प्राप्त गर्दछन् ।" (सहीह बुखारी, किताबुल रिक़ाक, मुस्लिम किताबुल जनायेज)

[1]शिर्कको विशेषरुपले वर्णन गरिएको छ कि यो सबभन्दा ठूलो पाप हो । यसका अतिरिक्त यसमा अन्य पाप एवं त्रुटिहरु पनि आउँछन् किनकि यिनका प्रयोजन पनि मनुष्य आफ्ना इन्द्रियहरुको दासतालाई स्वीकार गरेर नै रहन्छ । यसैकारण केही मानिसहरु यसलाई क्रियात्मक शिर्क भन्दछन् ।

أَن يَأْتِيَ يَوْمٌ لَّا مَرَدَّ لَهُ مِنَ اللَّهِ يَوْمَئِذٍ يَصَّدَّعُونَ ﴿٤٣﴾

आओस् जसको वापसी अल्लाह (तआ़ला) को तर्फबाट छुँदैछैन,[1] त्यसदिन सबै अलग-अलग हुनेछन् ।[2]

مَن كَفَرَ فَعَلَيْهِ كُفْرُهُ وَمَنْ عَمِلَ صَالِحًا فَلِأَنفُسِهِمْ يَمْهَدُونَ ﴿٤٤﴾

(४४) कुफ्र गर्नेहरुमाथि उनका कुफ्र हुनेछ तथा सत्कर्म गर्नेहरु आफ्नै विश्राम गृहलाई सुन्दर बनाइराखेका छन् ।[3]

لِيَجْزِيَ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ مِن فَضْلِهِ إِنَّهُ لَا يُحِبُّ الْكَافِرِينَ ﴿٤٥﴾

(४५) ताकि अल्लाह (तआ़ला) आफ्नो कृपाले यिनीहरुलाई प्रतिफल देओस्, जसले ईमान स्वीकार गरे तथा सत्कर्म गरे,[4] त्यो काफ़िरहरुलाई मित्र बनाउँदैन ।

وَمِنْ آيَاتِهِ أَن يُرْسِلَ الرِّيَاحَ مُبَشِّرَاتٍ وَلِيُذِيقَكُم مِّن رَّحْمَتِهِ وَلِتَجْرِيَ الْفُلْكُ بِأَمْرِهِ وَلِتَبْتَغُوا

(४६) तथा त्यसका निशानीहरुमा शुभ-सूचना दिने[5] वायुहरुलाई पठाउनु पनि हो, यसकारण कि तिमीलाई आफ्नो दयाको स्वाद चखाओस्,[6] तथा यसकारण कि त्यसका आदेशहरुले डुङ्गाहरु चलून्[7]

[1]अर्थात् त्यो दिन आउनलाई कोही रोक्न सक्दैन । यसकारण त्यो दिन (केयामत) आउनुभन्दा पूर्व अल्लाहको आज्ञा-पालनको मार्ग तथा प्रशस्त मात्रामा पुण्य गरून् ।

[2]अर्थात् दुई गुटहरुमा विभाजित हुनेछन्, एउटा ईमान भएकाहरुको तथा दोस्रो काफ़िरहरुको ।

[3] يَمْهَدُونَ को अर्थ हो मार्ग प्रशस्त गर्नु, फर्श ओछ्याउनु अर्थात यिनीहरु सदाचारद्वारा स्वर्गमा जान तथा त्यहाँ उच्च स्थान प्राप्त गर्नका लागि मार्ग प्रशस्त गरिराखेका छन् ।

[4]अर्थात् मात्र पुण्य स्वर्गमा प्रवेशका लागि पर्याप्त हुने छैनन् जबसम्म उनका साथ अल्लाहको कृपा एवं दया पनि सम्मिलित हुनेछैन । त्यो त आफ्नो कृपाले एक-एक पुण्यको प्रतिफल दसदेखि सात सय गुनासम्म बरु त्यसभन्दा पनि अधिक दिनेछ ।

[5]अर्थात् यी वायु वर्षाको सूचक हुन्छन् ।

[6]अर्थात् वर्षाबाट मनुष्य पनि स्वाद एवं सुखको अनुभव गर्दछ तथा फसलहरु पनि लहराउँछन् ।

[7]अर्थात् वायुहरुद्वारा डुङ्गाहरु पनि चल्छन्, तात्पर्य हावाबाट चल्ने डुङ्गाहरु हुन् । अब मनुष्यले अल्लाहद्वारा प्रदान गरिएको बौद्धिक शक्तिको पूरा प्रयोग गरी अन्य डुङ्गाहरु तथा

مِنْ فَضْلِهِ وَلَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٤٦﴾

तथा यसकारण कि त्यसको कृपालाई तिमी खोज[1] तथा यसकारण कि तिमी कृतज्ञता व्यक्त गर ।[2]

وَلَقَدْ أَرْسَلْنَا مِنْ قَبْلِكَ رُسُلًا إِلَىٰ قَوْمِهِمْ فَجَاءُوهُمْ بِالْبَيِّنَاتِ فَانْتَقَمْنَا مِنَ الَّذِينَ أَجْرَمُوا ۖ وَكَانَ حَقًّا عَلَيْنَا نَصْرُ الْمُؤْمِنِينَ ﴿٤٧﴾

(४७) तथा हामीले तपाईंभन्दा पूर्व पनि (आफ्ना) रसूलहरुलाई उनका समुदायतिर पठायौं, उनीहरु उनका पासमा प्रमाण ल्याए । अनि हामीले पापीहरुसित प्रतिशोध लियौं । हामीलाई ईमानवालाहरुको सहायता अनिवार्य छ ।[3]

जहाजहरुको आविष्कार गरिसकेका छन् जो मेसिनहरुद्वारा चल्छन् । तैपनि उनका लागि पनि अनुकूल एवं उचित वायुहरुको आवश्यकता छ, अन्यथा अल्लाह तआ़ला उनीहरुलाई पनि तूफानी जलधाराहरुद्वारा डुबाइदिने सामर्थ्य राख्दछ ।

[1]अर्थात उनीद्वारा विभिन्न देशहरुको यात्रा गरी व्यापार गर्दछन् ।

[2]ती प्रकट एवं गुप्त उपहारहरुमाथि जसको कुनै गणना छैन । अर्थात ती सम्पूर्ण सुविधाहरु अल्लाह तआ़ला तिमीलाई यसकारण उपलब्ध गराउन्छ कि तिमी आफ्ना जीवनमा उनीबाट लाभ प्राप्त गर्न सक तथा अल्लाहको भक्ति एवं आज्ञा-पालन पनि गर ।

[3]अर्थात् हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम), जुनप्रकार हामीले तपाईंलाई सन्देष्टा बनाएर तपाईंका समुदायतिर पठाएका छौं, त्यसैप्रकार तपाईंभन्दा पूर्व पनि सन्देष्टा उनका समुदायहरुतिर पठायौं, उनका साथ तर्क, निशानीहरु तथा चमत्कारहरु पनि थिए, परन्तु ती समुदायहरुले उनलाई झुठ्लाए, उनीमाथि ईमान स्वीकार गरेनन् । अन्तमा उनीबाट यस झुठ्लाउनुको अपराध तथा पाप गर्नुका कारण हामीले उनीहरुलाई आफ्ना दण्ड एवं प्रकोपको निशाना बनायौं तथा ईमान भएकाहरुलाई सहायता एवं सहयोग दियौं जो हामीलाई अनिवार्य छ । यो यस्तो कि नबी सल्लल्लाहु अलैहि वसल्लम तथा उनीमाथि ईमान स्वीकार गर्ने मुसलमानहरुलाई सान्त्वना दिइराखिएको छ कि काफ़िर एवं मूर्तिपूजकहरु द्वारा झुठ्लाउनुका आचरणबाट घबराउनुको आवश्यकता छैन । यो कुनै नयाँ कुरा होइन । प्रत्येक नबीसँग त्यसका समुदायले यही व्यवहार गरेका छन् । यसका अतिरिक्त काफ़िरहरुलाई यो चेतावनी छ कि यिनीहरुले ईमान स्वीकार गरेनन् भने उनको परिणाम पनि यही हुनेछ जो पूर्वकालिक समुदायहरुको भैसकेको छ । किनकि अल्लाहको सहायता अन्ततः ईमानवालाहरुलाई नै प्राप्त हुनेछ, जसमा सन्देष्टा एवं त्यसमाथि ईमान स्वीकार गर्नेहरु सबै सम्मिलित छन् । حَقًّا . كَانَ को सूचक हो, जो पहिलै आइसकेको छ نَصْرُ الْمُؤْمِنِينَ त्यसको संज्ञा हो।

ٱللَّهُ ٱلَّذِى يُرْسِلُ ٱلرِّيَٰحَ فَتُثِيرُ سَحَابًا فَيَبْسُطُهُۥ فِى ٱلسَّمَآءِ كَيْفَ يَشَآءُ وَيَجْعَلُهُۥ كِسَفًا فَتَرَى ٱلْوَدْقَ يَخْرُجُ مِنْ خِلَٰلِهِۦ ۖ فَإِذَآ أَصَابَ بِهِۦ مَن يَشَآءُ مِنْ عِبَادِهِۦٓ إِذَا هُمْ يَسْتَبْشِرُونَ ﴿٤٨﴾

(४८) त्यो अल्लाह (तआला) हो जो वायुहरुलाई संचालित गर्छ, तिनी बादलहरुलाई उठाउँछन्[1] अनि अल्लाह (तआला) आफ्नो इच्छा अनुसार त्यसलाई आकाशमा फैलाइदिन्छ[2] तथा त्यसलाई टुक्रा-टुक्रा गरिदिन्छ[3] त्यसपछि तपाईं देख्नुहुन्छ कि त्यसका भित्रबाट थोपाहरु निस्कन्छन्,[4] तथा जसलाई अल्लाह तआला चाहन्छ ती भक्तहरुमाथि त्यो वर्षा गर्दछ तथा उनीहरु प्रसन्न हुन्छन् ।

وَإِن كَانُوا۟ مِن قَبْلِ أَن يُنَزَّلَ عَلَيْهِم مِّن قَبْلِهِۦ لَمُبْلِسِينَ ﴿٤٩﴾

(४९) तथा विश्वास गर्नु कि वर्षा उनीमाथि वर्षानुभन्दा पूर्व त उनीहरु निराश भइराखेका थिए ।

فَٱنظُرْ إِلَىٰٓ ءَاثَٰرِ رَحْمَتِ ٱللَّهِ كَيْفَ يُحْىِ ٱلْأَرْضَ بَعْدَ مَوْتِهَآ ۚ إِنَّ ذَٰلِكَ لَمُحْىِ ٱلْمَوْتَىٰ ۖ وَهُوَ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ﴿٥٠﴾

(५०) तसर्थ तपाईं अल्लाहको कृपाका लक्षण हेर्नुस् कि धर्तीको मृत्यु पश्चात कसरी अल्लाह तआला त्यसलाई जीवित गरिदिन्छ । नि:सन्देह त्यही मृतकहरुलाई जीवित पार्ने हो,[5] तथा त्यो प्रत्येक वस्तुमाथि सामर्थ्यवान छ ।

[1]अर्थात् ती बादल जहाँ पनि हुन्छन्, त्यहाँबाट वायुहरु उनलाई उडाएर लग्छन् ।

[2]कहिले चलाएर, कहिले रोकेर, कहिले तहमाथि तह गरेर, कहिले टाढासम्म । यी आकाशका बादलहरुका विभिन्न अवस्थाहरु हुन् ।

[3]अर्थात् उनलाई आकाशमा फैलाए पश्चात कहिल्यै उनलाई विभिन्न टुक्राहरुमा विभक्त (विभाजित) गरिदिन्छ ।

[4] وَدْق को अर्थ वर्षा हो । अर्थात् ती बादलहरुबाट अल्लाह यदि चाहन्छ भने वर्षा हुन्छ, जसबाट वर्षाका इच्छुक प्रसन्न हुन्छन् ।

[5] آثار رحمت सित तात्पर्य ती अनाज एवं पैदावार तथा फलहरु हुन् जो वर्षाले उत्पन्न हुन्छन् तथा सुख-सुविधा एवं प्रसन्नताका कारण हुन्छन् । हेर्नुको तात्पर्य शिक्षा ग्रहण गर्ने दृष्टिले हेर्नु हो तथा मनुष्य अल्लाहको शक्ति एवं सामर्थ्य तथा यस कुरालाई स्वीकार गरोस् कि त्यसले केयामतका दिन त्यसैप्रकारले मृतकहरुलाई जीवित गर्नेछ ।

وَلَئِنْ أَرْسَلْنَا رِيحًا فَرَأَوْهُ مُصْفَرًّا لَّظَلُّوا مِنْ بَعْدِهِ يَكْفُرُونَ ﴿٥١﴾

(५१) तथा यदि हामी तीब्र हावा चलाइदिन्छौं तथा यिनीहरु ती खेतीहरुलाई (ओइलाएको) पहेंलो परेको देख्छन् भने त्यस पश्चात कृतघ्नता व्यक्त गर्न थाल्छन् ।[1]

فَإِنَّكَ لَا تُسْمِعُ الْمَوْتَىٰ وَلَا تُسْمِعُ الصُّمَّ الدُّعَاءَ إِذَا وَلَّوْا مُدْبِرِينَ ﴿٥٢﴾

(५२) निःसन्देह तपाईं मृतकहरुलाई सुनाउन सक्नुहुन्न[2] तथा न बहिराहरुलाई (आफ्नो) आवाज सुनाउन सक्नुहुन्छ,[3] जबकि उनीहरु पिठ्यूँ फर्काइ विमुख भइसकेका होऊन् ।[4]

وَمَا أَنْتَ بِهَادِ الْعُمْيِ عَنْ ضَلَالَتِهِمْ ۖ إِنْ تُسْمِعُ إِلَّا مَنْ يُؤْمِنُ بِآيَاتِنَا

(५३) तथा न तपाईं अन्धाहरुलाई उनको पथभ्रष्टताबाट मार्गदर्शन दिने हुनुहुन्छ ।[5] तपाईं त केवल उनीहरुलाई सुनाउनु हुन्छ जो हाम्रा आयतहरुमा

[1]अर्थात् उनै खेतहरुलाई जसलाई हामीले वर्षाद्वारा हराभरा गरेका थियौं, यदि अत्यन्त (गर्मी अथवा शीतल) वायुहरु चलेर उनको हरियालीलाई पहेंला गरिदिन्छन् अर्थात् तयार फसलको विनाश गरिदिन्छन् त यिनै वर्षाबाट प्रसन्न हुनेहरु अल्लाहको विनाश गरिदिन्छन् त यिनै वर्षाबाट प्रसन्न हुनेहरु अल्लाहको कृतघ्नता व्यक्त गर्नेछन् । अर्थ यो हो कि अल्लाहलाई मान्नेवाला धैर्य एवं साहसबाट पनि बञ्चित हुन्छन् । अलिकति कुरामा अत्याधिक प्रसन्न तथा अलिकति परीक्षाबाट निराश हुन्छन् । ईमान भएकाहरुको व्यवहार दुबै अवस्थाहरुमा भिन्न हुन्छन् जस्तो कि विस्तृत वर्णन गुज्रिसकेको छ ।

[2]अर्थात् जुनप्रकार मृत व्यक्ति समझ एवं प्रबोधबाट शून्य हुन्छन्, त्यसैप्रकार यिनीहरु तपाईं सल्लल्लाहु अलैहि वसल्लमका आमन्त्रणलाई बुझ्ने तथा त्यसलाई स्वीकार गर्नमा असमर्थ छन् ।

[3]अर्थात् तपाईं सल्लल्लाहु अलैहि वसलल्लमको शिक्षा एवं उद्देश्य उनका लागि व्यर्थ छ, जुनप्रकार कोही बहिरा होस्, उसलाई तपाईं आफ्नो कुरा सुनाउन सक्नुहुन्न ।

[4]यो उनीबाट तर्कनु एवं विमुख हुनुको अधिक स्पष्टीकरण हो कि उनी मृतक एवं बहिरा हुनुका साथै पिठ्यूँ फर्काउनेहरु हुन् । सत्यका कुराहरु उनका कानहरुमा कसरी पर्न सक्छ तथा कसरी उनका हृदय तथा मस्तिष्कमा पस्नसक्छ ?

[5]यसकारण कि यिनीहरु आँखाबाट जुन लाभ प्राप्त हुन्छ त्यसलाई प्राप्त गर्न सक्दैनन् अथवा दृष्टि (हृदयदृष्टि) बाट बञ्चित छन् । यिनीहरु विचलनका जुन दलदलमा फँसेका छन्, त्यसबाट कसरी निस्कुन् ?

فَهُم مُّسْلِمُونَ ﴿٥٣﴾

विश्वास (ईमान) गर्दछन्[1] तथा छन् पनि उनीहरु आज्ञाकारी ।[2]

ٱللَّهُ ٱلَّذِى خَلَقَكُم مِّن ضَعْفٍ ثُمَّ جَعَلَ مِنۢ بَعْدِ ضَعْفٍ قُوَّةً ثُمَّ جَعَلَ مِنۢ بَعْدِ قُوَّةٍ ضَعْفًا

(५४) अल्लाह (तआला) त्यो हो, जसले तिमीलाई शक्तिहीन अवस्थामा पैदा गऱ्यो,[3] अनि त्यस निर्बलताका पश्चात बल प्रदान गऱ्यो,[4] अनि त्यस शक्तिका पश्चात क्षीणता तथा बृद्धावस्था गऱ्यो[5]

[1]अर्थात् यही सुनेर ईमान स्वीकार गर्नेहरु हुन्, यसकारण कि यिनीहरु बुद्धिमान एवं चिन्तन-मनन गर्नेहरु हुन् तथा प्रकृतिका प्रतीकबाट वास्तविक प्रभावी ज्ञान प्राप्त गर्दछन् ।

[2]अर्थात् सत्यका समक्ष टाउको निहुराउने तथा त्यसका अनुयायी हुन् ।

[3]यहाँबाट अल्लाह (तआला) आफ्ना सामर्थ्यको एउटा अन्य चमत्कार वर्णन गरिराखेको छ तथा त्यो हो विभिन्न विधिहरुबाट मनुष्यको सृष्टि । निर्बल (क्षीणताको अवस्था) सित तात्पर्य वीर्य अर्थात् पानीको थोपा हो अथवा बाल्यकाल ।

[4]अर्थात् यौवनकाल, जसमा मानसिक, शारीरिक शक्ति पूर्णरुपले विकसित भएको हुन्छ ।

[5]क्षीणताबाट तात्पर्य आयुको त्यो अवस्था हो जब मानसिक तथा शारीरिक क्षीणताको प्रारम्भ हुन्छ तथा बृद्धावस्थासित तात्पर्य आयुको त्यो अवधि हो जसमा दुर्बलताको बृद्धि हुनजान्छ । साहसको अभाव, हात-खुट्टाको गति एवं पकड कम, कपाल सेतो तथा समस्त आन्तरिक एवं बाह्य शक्तिहरु क्षीण हुन जान्छन् । कुर्आनले मनुष्यको आयुको यी चार अवस्थाहरु वर्णन गरेको छ । केही आलिमहरु (धर्मगुरुहरु) ले अन्य अल्प अवस्थाहरुको पनि वर्णन गरेका छन्, जो कुर्आनका संक्षेपको व्याख्या एवं चमत्कारिक शैलीको स्पष्टीकरण हो, जस्तो इमाम इब्ने कसीर भन्नुहुन्छ कि मनुष्य एकपछि अर्को ती परिस्थिति एवं अवस्थाहरुबाट गुज्रन्छ । यसको मूल तत्व माटो हो अर्थात् त्यसका पिता आदमको उत्पत्ति माटोबाट भएको थियो । अर्थात् मनुष्य जे-जति खान्छ, जसबाट त्यो वीर्य उत्पन्न हुन्छ जो माताका गर्भमा गई त्यसको सृष्टिको कारण बन्दछ, त्यो सबै माटोकै पैदावार हो । पछि, त्यो वीर्यबाट रक्तको डल्लो, अनि मांशको डल्लो, त्यसपछि अस्थिहरु जसलाई मांशको वस्त्र पहिराइन्छ अनि पछि त्यसमा आत्मा फुकिन्छ । पछि माताका गर्भबाट यस अवस्थामा निस्कन्छ कि अत्यन्त क्षीण, कोमल तथा निर्बल हुन्छ । अनि त्यसका पश्चात समयानुसार क्रमशः बढ्दै बाल्यकाल, किशोर काल, तथा यौवनकाल पुग्छ तथा तदुपरान्त पुनः क्षीणताको अवस्थातिर फर्कन्छ, बृद्धावस्था तथा पुनः वयोबृद्धाअवस्था यहाँसम्मकि मृत्यु आइपुग्छ ।

وَّشَيْبَةً ۭ يَخْلُقُ مَا يَشَاۗءُ ۚ وَهُوَ الْعَلِيْمُ الْقَدِيْرُ ۝

जे चाहन्छ पैदा गर्दछ,[1] त्यो सबै कुरासित परिचित तथा सबैमाथि पूर्ण सामर्थ्यवान छ ।

وَيَوْمَ تَقُوْمُ السَّاعَةُ يُقْسِمُ الْمُجْرِمُوْنَ ڏ مَا لَبِثُوْا غَيْرَ سَاعَةٍ ۭ كَذٰلِكَ كَانُوْا يُؤْفَكُوْنَ ۝

(५५) तथा जुन दिन केयामत व्याप्त हुनेछ[2] पापीहरु सौगन्ध खानेछन् कि (संसारमा) एक क्षणका अतिरिक्त रहेनन्,[3] यसैप्रकार यिनीहरु भ्रमित नै रहे ।[4]

وَقَالَ الَّذِيْنَ اُوْتُوا الْعِلْمَ وَالْاِيْمَانَ لَقَدْ لَبِثْتُمْ فِيْ كِتٰبِ اللّٰهِ اِلٰى يَوْمِ الْبَعْثِ ۡ فَهٰذَا يَوْمُ الْبَعْثِ

(५६) तथा जसलाई ज्ञान तथा ईमान प्रदान गरियो उनीहरु उत्तर दिनेछन् कि[5] तिमी त जस्तो कि अल्लाहको किताबमा छ[6] केयामतका दिनसम्म रहे ।[7] आजको यो दिन

[1]तीनै वस्तुहरुमा दुर्बलता एवं बल पनि हो, जसबाट मनुष्य गुज्रन्छ जस्तो कि अहिले विस्तृत वर्णन गुज्रिसकेको छ ।

[2]साअतको अर्थ हो घडी, क्षण, तात्पर्य क़्यामत हो । त्यसलाई क्षण यसकारण भनिएको छ कि त्यो घटित हुनु जब अल्लाह चाहन्छ एक क्षणमा हुनेछ । अथवा यसकारण कि यो त्यस क्षणमा हुनेछ जो संसारको अन्तिम क्षण हुनेछ ।

[3]संसारमा अथवा चिहानहरुमा । यो आफ्ना स्वभावका अनुसार झूठा सौगन्ध खानेछन्, यसकारण कि संसारमा उनी जति समय रहनेछन् उनको ज्ञानमा नै हुनेछ तथा यदि तात्पर्य चिहानको जीवन छ भने उनको सौगन्ध अज्ञानताका कारण हुनेछ किनकि उनी चिहानको अवधि जानेको हुनेछैन । केही ज्ञाताहरु भन्दछन् कि केयामतका कठोरता एवं भयानकताको तुलनामा संसारको जीवन उनीहरुलाई क्षणिक नै प्रतीत हुनेछ ।

[4]أُفِكَ الرَّجُلُ को अर्थ हो सत्यबाट विमुख भए । अर्थ हुन्छ, त्यसै विमुखताका समान उनी संसारमा विमुख रहे । अथवा मार्गविचलित रहे ।

[5]जुनप्रकार यी विद्वान संसारमा पनि बुझाउँदै गरेका थिए ।

[6]अल्लाहको किताबसित तात्पर्य अल्लाहको ज्ञान तथा त्यसको निर्णय हो अर्थात लौहे महफ़ूज़ (सुरक्षित पुस्तक)

[7]अर्थात् जन्मका दिनदेखि केयामतका दिनसम्म ।

وَلَٰكِنَّكُمْ كُنتُمْ لَا تَعْلَمُونَ ﴿٥٦﴾

केयामतका दिन हो, परन्तु तिमीले त विश्वास नै गर्दैनथ्यौ ।[1]

فَيَوْمَئِذٍ لَّا يَنفَعُ الَّذِينَ ظَلَمُوا مَعْذِرَتُهُمْ وَلَا هُمْ يُسْتَعْتَبُونَ ﴿٥٧﴾

(५७) त त्यस दिन अत्याचारीहरुलाई उनको तर्क कुनै काम आउने छैन तथा न उनीसित क्षमा माँग्न लगाइनेछ न कर्म माँगिनेछ ।[2]

وَلَقَدْ ضَرَبْنَا لِلنَّاسِ فِي هَٰذَا الْقُرْآنِ مِن كُلِّ مَثَلٍ ۚ وَلَئِن جِئْتَهُم بِآيَةٍ لَّيَقُولَنَّ الَّذِينَ كَفَرُوا إِنْ أَنتُمْ إِلَّا مُبْطِلُونَ ﴿٥٨﴾

(५८) तथा निःसन्देह हामीले यस कुर्आनमा मानिसहरुका समक्ष सबै उदाहरण वर्णन गरेका छौं ।[3] तपाईं उनको पासमा कुनै पनि लक्षण ल्याउनुस्,[4] यी काफ़िर त यही भन्दछन् कि तिमी (बकवास गर्ने) झूठा हौ ।[5]

كَذَٰلِكَ يَطْبَعُ اللَّهُ عَلَىٰ قُلُوبِ الَّذِينَ لَا يَعْلَمُونَ ﴿٥٩﴾

(५९) अल्लाह (तआ़ला) उनका हृदयमा जो ज्ञान राख्दैनन्, त्यसैप्रकार मोहर (छाप) लगाइदिन्छ ।

[1]कि त्यो आउनेछ बरु उपहास एवं मिथ्यारोपणका रुपमा त्यसको तिमी माँग गर्दथ्यौ ।

[2]अर्थात् उनीहरुलाई संसारमा पठाएर यो अवसर दिइने छैन कि त्यहाँ क्षमा एवं आज्ञा पालनद्वारा अल्लाहका प्रकोपको निवारण गर ।

[3]जसबाट अल्लाहको एकता प्रमाणित एवं सन्देष्टाहरुको सत्यता प्रमाणित हुन्छ तथा त्यसैप्रकार शिर्कको खण्डन तथा त्यसको असत्यता प्रदर्शित हुन्छ ।

[4]त्यो कुर्आनद्वारा प्रस्तुत गरिएको कुनै प्रमाण होस् अथवा उनको इच्छा अनुसार कुनै चमत्कार आदि ।

[5]अर्थात् जादू आदिका अनुयायी । अर्थ यो हो कि ठूलाभन्दा ठूला निशानी, स्पष्ट तर्क एवं निशानीहरु पनि यिनीहरु देखिहालून् तैपनि यिनीहरु ईमान स्वीकार गर्ने छैनन्, किन ? यसको कारण अघि वर्णन गरिदिइएको छ कि अल्लाहले उनका हृदयमा मोहर लगाइदिइएको छ, जो यस कुराको लक्षण हुन्छ कि उनको कुफ्र एवं सीमा उल्लंघन त्यस अन्तिम सीमासम्म पुगिसकेको छ जसपश्चात सत्यतिर फर्कने समस्त मार्ग उनका लागि बन्द छन् ।

(६०) तसर्थ तपाईं धैर्य राख्नुस्,[1] निःसन्देह अल्लाहको वचन सत्य छ । तपाईंलाई उनीहरु हल्का (अधीर) नगरून्,[2] जो विश्वास गर्दैनन् ।

فَاصْبِرْ إِنَّ وَعْدَ اللَّهِ حَقٌّ وَلَا يَسْتَخِفَّنَّكَ الَّذِينَ لَا يُوقِنُونَ ﴿٦٠﴾

## सूरतु लुक़मान-३१

سُورَةُ لُقْمَانَ

सूरः लुकमान मक्कामा अवतरित भयो, यसमा चौंतीस आयतहरु तथा चार रुकूअ छन् ।

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु एवं अत्यन्त दयालु छ ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

(१) अलिफ. लाम. मीम.[3]

الٓمٓ ﴿١﴾

(२) यी हिक्मत (दिव्यज्ञान) भएको किताबका आयतहरु हुन् ।

تِلْكَ آيَاتُ الْكِتَابِ الْحَكِيمِ ﴿٢﴾

[1]अर्थात् उनका विरोध एवं द्वेषमाथि तथा उनका कष्टदायक कुराहरुमाथि, यसकारण कि अल्लाहले तपाईं सल्लल्लाहु अलैहि वसल्लमलाई सहायताको जुन वचन दिएको छ, त्यो निश्चित रुपमा सत्य छ, जो प्रत्येक परिस्थितिमा पूरा हुनेछ ।

[2]अर्थात् तपाईंलाई क्रोधित गरेर धैर्य एवं संयम छाड्न अथवा प्रशंसा गर्नमा बाध्य नगरिदेऊन्, बरु तपाईं सल्लल्लाहु अलैहि वसल्लम आफ्ना ध्येयमा अडिग रहनुस् तथा त्यसबाट अलिकति पनि विमुख नहुनुस् ।

[3]यसका प्रारम्भमा पनि यी विच्छेदित अक्षर छन्, जसका अर्थ तथा प्रयोजनका ज्ञान मात्र अल्लाहलाई नै छ। तैपनि व्याख्याकारहरुले यसका दुई महत्वपूर्ण लाभ बताएका छन् । एक यो कि यो कुरआन यसैप्रकारका विच्छेदित अक्षरहरुका योग तथा अनुक्रमबाट रचित छ, जसका समतुल्य संकलन प्रस्तुत गर्नबाट अरबी भाषी विवश भए। यो यस कुराको प्रमाण हो कि यो कुरआन अल्लाहद्वारा नै अवतरित गरिएको हो तथा त्यो सच्चा सन्देष्टा हो जसमाथि त्यो अवतरित भएको छ, जो त्यो धार्मिक नियम लिएर आएको छ मनुष्यलाई त्यसको आवश्यकता छ तथा त्यसको सुधार एवं सौभाग्यको परिपूर्णता त्यसै धार्मिक नियमबाट संभव छ। दोस्रो यो कि कहीं उनीहरु यसबाट प्रभावित भई मुसलमान नभईहालून् । अल्लाह तआलाले विभिन्न सूरतहरुका प्रारम्भमा यसैप्रकारका विभिन्न विच्छेदित अक्षरहरुबाट गऱ्यो ताकि उनीहरु यसलाई सुन्नका लागि बाध्य होऊन् किनकि वर्णनको यो विधि नयाँ तथा अनौठो थियो । (ऐसरूत्तफ़ासीर) ।

هُدًى وَّرَحْمَةً لِّلْمُحْسِنِيْنَ ۝٣

(३) जो सदाचारीहरुका लागि[१] मार्गदर्शन एवं (सर्वथा) कृपा हो ।

الَّذِيْنَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَيُؤْتُوْنَ الزَّكٰوةَ وَهُمْ بِالْاٰخِرَةِ هُمْ يُوْقِنُوْنَ ۝٤

(४) जो मानिस नियमित रुपमा नमाज़ पढ्दछन् तथा ज़कात (धर्मदान) दिन्छन् तथा आख़िरतमा (पूर्ण) विश्वास गर्दछन् ।[२]

اُولٰٓئِكَ عَلٰى هُدًى مِّنْ رَّبِّهِمْ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ۝٥

(५) यिनै मानिसहरु हुन् जो आफ्ना प्रभुतिर बाट मार्गदर्शन प्राप्त छन् तथा यी नै मोक्ष प्राप्त गर्नेहरु हुन् ।[३]

وَمِنَ النَّاسِ مَنْ يَّشْتَرِيْ لَهْوَ الْحَدِيْثِ لِيُضِلَّ عَنْ سَبِيْلِ اللّٰهِ

(६) तथा केही मानिसहरु यस्ता पनि छन् जो अनायास कुराहरुको क्रेता भन्दछन्[४] अज्ञानताका साथ

[१] مُحسن (मुहसिन) को बहुवचन مُحسنين (मुहसिनीन) हो । यसको एक अर्थ हो उपकार गर्ने व्यक्ति, माता-पितासँग, नजिकका सम्बन्धिहरुसित, अधिकार भएका एवं दरिद्रहरुसँग । दोस्रो अर्थ हो पुण्य गर्ने व्यक्ति, अर्थात् नराम्रा कुराबाट टाढा रहने सदाचारी । तेस्रो अर्थ हो अल्लाहको इबादत निःस्वार्थता एवं एकाग्रता तथा ध्यानसित गर्ने मानिस जुनप्रकार हदीसे जिब्रीलमा छ, «أَنْ تَعْبُدَ اللهَ كَأَنَّكَ تَرَاهُ» (अल्लाहको उपासना यस्तो गर मानौं तिमी त्यसलाई देखिराखेका छौ) कुर्आन त्यसो त समस्त जगत्का लागि मार्गदर्शक हो तथा दयाको साधन हो परन्तु यसको मूल लाभ परोपकारी, सदाचारी तथा अल्लाहसित भय गर्नेहरु नै लाभ प्राप्त गर्छन् । यसकारण यहाँ यसप्रकार वर्णन गरिएको छ ।

[२] नमाज़, ज़कात तथा परलोक (आख़िरत) मा विश्वास । यी तीनै कुरा अत्यन्त महत्वपूर्ण छन् । यसकारण यिनको विशेषरुपले वर्णन गरियो अन्यथा परोपकारी, सदाचारी एवं अल्लाहसित तर्सने समस्त अनिवार्य आदेश तथा सुन्नत वरु उत्तम कर्महरुसम्म निरन्तर दृढतापूर्वक पालना गर्दछन् ।

[३] فلاح (फलाह) को भावार्थका लागि हेर्नुस् सूरः बकरः तथा मोमिनूनको प्रारम्भिक अंश ।

[४] भाग्यवान मानिस जो अल्लाहको किताबसित मार्गबाट प्राप्त तथा त्यसलाई सुनेर लाभान्वित हुन्छन्, तिनका वर्णनका पश्चात ती हतभागी मानिसहरुको वर्णन भइराखेको छ, जो अल्लाहका कथनलाई सुन्नबाट त विमुख हुन्छन्, परन्तु संगीत एवं गीत, नाचगान आदि अत्यन्त रुचिले सुन्दछन् तथा त्यसमा सम्मिलित हुन्छन् । क्रयबाट तात्पर्य यही हो कि संगीतका यन्त्रहरुलाई आफ्ना घरहरुमा ल्याउँछन् तथा त्यसपछि तिनीबाट आनन्दित हुन्छन् । لهو الحديث सित तात्पर्य गाउनु वजाउनु, त्यसको यन्त्र संगीत तथा प्रत्येक त्यो वस्तु हो जो मनुष्यलाई पुण्य एवं

بِغَيْرِ عِلْمٍ ۖ وَيَتَّخِذَهَا هُزُوًا ۚ أُولَٰئِكَ لَهُمْ عَذَابٌ مُّهِينٌ ⑥

(मानिसहरुलाई अल्लाहका मार्गबाट विचलित पार्दछन् तथा त्यसलाई उपहास बनाउँछन्,[1] यिनै त्यसता हुन् जसका लागि अपमानित गर्ने यातना छ ।[2]

وَإِذَا تُتْلَىٰ عَلَيْهِ آيَاتُنَا وَلَّىٰ مُسْتَكْبِرًا كَأَن لَّمْ يَسْمَعْهَا كَأَنَّ فِي أُذُنَيْهِ وَقْرًا ۖ فَبَشِّرْهُ بِعَذَابٍ أَلِيمٍ ⑦

(७) तथा जब त्यसका समक्ष हाम्रा आयतहरुको पाठ गरिन्छ, त अंहकारका साथ यसप्रकार मुख फर्काउन्छ कि जस्तो उसले सुनेकै छैन, जस्तो कि उसका दुबै कानहरु बहिरा छन् ।[3] तपाईं त्यसलाई कष्टदायी यातनाको सूचना दिनुस् ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ

(८) नि:सन्देह जसले ईमान स्वीकार गरे तथा काम पनि नेक (धर्म परायणता

सत्कर्मबाट अचेत गरिदिन्छ । यसमा कथा, गल्प रचनाहरु, काम सम्बन्धी एवं आश्चर्यजनक साहित्य तथा असभ्यताका प्रचारक समाचारपत्र पनि आउँछन् तथा आधुनिक आविष्कारहरुमा रेडियो, टि. भी., भी. सी. आर तथा फिल्महरु आदि पनि । सन्देष्टाका युगमा केही मानिसहरुले गाउने, बजाउने दासीहरु पनि यसै उद्देश्यका लागि किनेका थिए ताकि तिनीहरु मानिसहरुका मन गीत सुनाएर आनन्दित गरिराखून् ताकि कुर्आन तथा इस्लामबाट टाढा रहून् । यस आधारमा यसमा गायिकाहरु पनि आउँछन् जो आजकल कलाकार, फिल्मी सिताराहरु तथा सांस्कृतिक दूत तथा विभिन्न प्रकारका सभ्य, आकर्षक एवं हृदयस्पर्शी नामहरुबाट पुकारिन्छन् ।

[1]यी समस्त कुराहरुबाट निश्चित रुपले मनुष्य अल्लाहका मार्गबाट विचलित हुन्छन् तथा धर्मलाई उपहास एवं हाँसोको निशाना पनि बनाउँछन् ।

[2]यिनको संरक्षकता गर्ने एवं साहस बढाउने राज्यनेता, संस्था, समाचारपत्रहरुका स्वामी, लेखक र संवाद लेखक पनि यसै घोर यातनाका अधिकारी हुनेछन् ।

[3]यो त्यस व्यक्तिको दशा हो जो उपरोक्त मनोरञ्जनका साधनहरुमा मँग्न रहन्छ, त्यो कुर्आनका आयतहरु (सुत्रहरु) तथा अल्लाहका सन्देष्टाका कुराहरुलाई सुनेर बहिरा बन्न खोज्छ जबकि त्यो बहिरा हुँदैन तथा यसप्रकार मुख फर्काउँछ जस्तो उसले सुनेकै छैन, किनकि त्यो सुन्नबाट त्यो कष्ट अनुभव गर्दछ, यसकारण त्यसलाई यसबाट कुनै लाभ हुँदैन । وقرا को अर्थ हो कानहरुमा त्यस्तो बोझ जो उसलाई सुन्नबाट बञ्चित गरिदिन्छ ।

لَهُمْ جَنّٰتُ النَّعِيْمِ ۙ﴿٨﴾

का अनुसार) गरे उनका लागि सुखहरु भएका स्वर्ग छन् ।

خٰلِدِيْنَ فِيْهَا ۭ وَعْدَ اللّٰهِ حَقًّا ۭ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿٩﴾

(९) जहाँ उनीहरु सधैं रहनेछन्, अल्लाहको सत्य वचन छ,[1] त्यो अत्यन्त महिमा भएको तथा पूर्ण दिव्यज्ञान सम्पन्न छ ।

خَلَقَ السَّمٰوٰتِ بِغَيْرِ عَمَدٍ تَرَوْنَهَا وَاَلْقٰى فِي الْاَرْضِ رَوَاسِيَ اَنْ تَمِيْدَ بِكُمْ وَبَثَّ فِيْهَا مِنْ كُلِّ دَاۗبَّةٍ ۭ وَاَنْزَلْنَا مِنَ السَّمَاۗءِ مَاۗءً فَاَنْۢبَتْنَا

(१०) उसैले आकाशहरुलाई बिना स्तम्भ बनाएको छ, तिमी उनीहरुलाइ देखिराखेका छौ,[2] तथा उसले धर्तीमाथि पर्वतहरुलाई राखिदियो ताकि तिनीहरु तिमीलाई कम्पित पार्न नसकून्,[3] तथा हरप्रकारका जीवधारी धर्तीमा फैलाइदियो ।[4] र उसले

[1]अर्थात् यो अवश्य पूरा हुनेछ, यसकारण कि यो अल्लाहको तर्फबाट छ । وَاللهُ لا يُخْلِفُ المِيعاد "तथा अल्लाह आफ्नो वचन भङ्ग गर्दैन ।"

[2]تَرَوْنَـــهَا यदि عَمَدٌ को विशेषण हो भने अर्थ हुन्छ यस्ता स्तम्भरहित जो तिमी देख्न सक, अर्थात् आकाशका स्तम्भ हुन् । परन्तु यस्ता कि तिमी देख्न सक्दैनौं ।

[3]رَاسِيَةٌ को वहुवचन رَوَاسِي हो जसको अर्थ ثَابِتَةٌ हो । अर्थात् पर्वतहरुलाई धर्तीमा यसप्रकार भारी बोझ बनाएर राखिदिएको छ कि जसबाट धर्ती स्थिर रहोस् अर्थात कम्पित नहोस् । यसैकारण अगाडी भन्यो أن تَمِيدَبِكُم يَعني كراهَةَ أن تَمِيدَ (تَمِيل) بِكُم أولِئَلا تَمِيدَ अर्थात् यस कुराको अप्रियताले कि धर्ती तिमीसँग यताउता हल्लियोस्, अथवा यसकारण कि धर्ती यताउता नहोस् । जुनप्रकार समुद्र तटमा उभिएका जहाजहरुमा ठूला-ठूला लंगर हालिन्छन् ताकि जहाज यताउता नजाओस् । धर्तीका लागि पर्वतहरुको पनि यही स्थिति छ ।

[4]अर्थात् विभिन्न प्रकारका पशु धर्तीमा प्रत्येक दिशामा फैलाइदियो जसलाई मनुष्य खान्छ पनि, सवारी एवं सरसामान ओसार्नका लागि पनि प्रयोग गर्दछ तथा शोभा एवं सौन्दर्य हेतु पनि आफ्नो पासमा राख्दछ ।

فِيهَا مِن كُلِّ زَوْجٍ كَرِيمٍ ⑩

आकाशबाट वर्षा गरी धर्तीबाट हरेक प्रकारका सुन्दर जोडाहरु उब्जायो ।[1]

هَٰذَا خَلْقُ اللَّهِ فَأَرُونِي مَاذَا خَلَقَ الَّذِينَ مِن دُونِهِ ۚ بَلِ الظَّالِمُونَ فِي ضَلَالٍ مُّبِينٍ ⑪

(११) यो अल्लाहको सृष्टि[2] अब तिमी मलाई यसको बाहेक अन्य कसैको कुनै सृष्टि त देखाउ[3] (केही होइन), यी अत्याचारी खुल्ला कुमार्गमा छन् ।

وَلَقَدْ آتَيْنَا لُقْمَانَ الْحِكْمَةَ أَنِ اشْكُرْ لِلَّهِ ۚ وَمَن يَشْكُرْ

(१२) तथा हामीले नि:सन्देह लुक़मानलाई तत्वज्ञान दियौं[4] के तिमी अल्लाह (तआ़ला) को

---

[1] زوج यहाँ प्रकारका अर्थमा छ अर्थात् हरप्रकारका अन्न तथा फल पैदा गरे । यिनको विशेषण करीम, यिनका रङ्गको सुन्दरता एवं अधिक लाभतिर संकेत गर्दछ ।

[2] هـذا (यो) संकेत हो अल्लाहका ती पैदा गरिएका वस्तुहरुतिर जसको पूर्वका आयतहरुमा वर्णन भयो ।

[3] अर्थात् जसको तिमी पूजा गर्दछौ तथा उनलाई सहायताका लागि पुकार्दछौ, उनीहरुले आकाश तथा धर्तीका कुनचाहिं वस्तु बनाएका छन् ? कुनै एउटा वस्तु त बताउ । अर्थ यो हो कि जब प्रत्येक वस्तुको स्रष्टा केवल तथा मात्र अल्लाह नै हो त पूजाका योग्य पनि केवल त्यही नै हो । त्यसका अतिरिक्त सृष्टिमा कोही पनि यस योग्य छैन कि त्यसको पूजा गरियोस् तथा त्यसलाई सहायताका लागि पुकारियोस् ।

[4] आदरणीय लुक़मान अल्लाहका सदाचारी भक्त थिए जसलाई अल्लाह तआ़लाले बुद्धि एवं विवेक तथा धार्मिक दिव्य ज्ञानमा उच्च स्थान प्रदान गरेको थियो । उनीसित कसैले सोध्यो कि तिमीलाई यो ज्ञान एवं बोध कसरी प्राप्त भयो । उहाँले भन्नुभयो, सोझो मार्गमा रहन, ईमान्दारीलाई अपनाउन तथा अलाभकारी कुराहरुबाट बच्नाले एवं शान्त रहनका कारण । उनी दास थिए । उनको स्वामीले भने कि बाखा काटेर त्यसका सर्वश्रेष्ठ दुई भाग ल्याउ । अन्ततः उनी जिब्रो तथा हृदय निकालेर ल्याए । एउटा अन्य अवसरमा स्वामीले उनीसित भने कि बाखा काटेर त्यसको सबभन्दा नराम्रो दुई भाग ल्याउ । उनी फेरि त्यही जिब्रो तथा मुटु लिएर गए । सोधे पश्चात उनले भने कि जिब्रो तथा हृदय यदि ठीक छन् भने त यी सर्वोत्तम छन् तथा यदि बिग्रन्छन् भने तिनीभन्दा नराम्रो कुनै वस्तु छैन । (इब्ने कसीर)

وَأَنَّمَا يَشْكُرُ لِنَفْسِهِۦ ۖ وَمَن كَفَرَ فَإِنَّ ٱللَّهَ غَنِىٌّ حَمِيدٌ ۝١٢

कृतज्ञता व्यक्त गर,[1] प्रत्येक कृतज्ञ आफ्नै लाभका लागि कृतज्ञता व्यक्त गर्दछ, जो पनि कृतघ्नता व्यक्त गर्दछ, त्यो जानीहालोस् कि अल्लाह (तआला) निस्पृह प्रशंसित छ।

وَإِذْ قَالَ لُقْمَٰنُ لِٱبْنِهِۦ وَهُوَ يَعِظُهُۥ يَٰبُنَىَّ لَا تُشْرِكْ بِٱللَّهِ ۖ إِنَّ ٱلشِّرْكَ لَظُلْمٌ عَظِيمٌ ۝١٣

(१३) तथा जब लुक़्मानले उपदेश दिँदै आफ्ना पुत्रसित भने कि हे मेरा प्रिय पुत्र ! अल्लाह (तआला) सँग साझेदार नबनाउनु,[2] निःसन्देह अल्लाहको साझेदार बनाउनु घोर अत्याचार हो।[3]

وَوَصَّيْنَا ٱلْإِنسَٰنَ بِوَٰلِدَيْهِ حَمَلَتْهُ أُمُّهُۥ وَهْنًا عَلَىٰ وَهْنٍ وَفِصَٰلُهُۥ

(१४) हामीले मनुष्यलाई त्यसका माता-पिताका सम्बन्धमा शिक्षा दिएका छौं,[4] त्यसकी माताले थुप्रै कष्टहरु सहन गरी[5] त्यसलाई गर्भमा राखिन् तथा

---

[1]कृतज्ञताको अर्थ हो अल्लाहका वरदानहरुमा त्यसको प्रशंसा तथा त्यसका आदेशहरुको पालना ।

[2]अल्लाह तआलाले आदरणीय लुक़्मानको सर्वप्रथम यो सदुपदेश बयान गरेको छ कि उनले आफ्ना पुत्रलाई शिर्कबाट रोके, जसबाट यो स्पष्ट भयो कि माता-पिताका लागि आवश्यक छ कि उनी आफ्ना सन्तानलाई शिर्कबाट बचाउनका लागि सर्वाधिक प्रयत्न गरून्।

[3]केही विद्वानहरुका निकट आदरणीय लुक़्मानकै कथन हो तथा केहीले यसलाई अल्लाहको कथन भनेका छन् तथा त्यसका समर्थनका लागि त्यो हदीस प्रस्तुत गरेका छन् जो ﴿ٱلَّذِينَ ءَامَنُوا۟ وَلَمْ يَلْبِسُوٓا۟ إِيمَٰنَهُم بِظُلْمٍ﴾ अवतरित हुने सम्बन्धमा आएको छ जसमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभएको थियो कि यहाँ अत्याचार सित तात्पर्य महाअत्याचार हो तथा आयत ﴿إِنَّ ٱلشِّرْكَ لَظُلْمٌ عَظِيمٌ﴾ को सन्दर्भ दिनु हो (सहीह बुख़ारी संख्या ४७७६)।परन्तु वास्तवमा यसबाट अल्लाहको कथन हुनुको न त समर्थन हुन्छ न खण्डन।

[4]एकेश्वरवाद तथा अल्लाहको इबादतका साथै माता-पिताका साथ सद्व्यवहार गर्नुमाथि जोड दिइएको छ। यसबाट यस शिक्षाको महत्व परिलक्षित हुन्छ।

[5]यसको अर्थ यो हो कि माताका गर्भमा बालक जस्तो बढ्छ मातामाथि बोझ बढ्न जान्छ, जसबाट माता कमजोर हुँदै गएको हुन्छ। माताका यी कष्टहरुका वर्णनबाट त्यसतिर पनि संकेत हुन्छ कि माता-पिताका साथ सद्व्यवहार गर्दाखेरि मातालाई प्राथमिकता दिइयोस् जस्तो कि हदीसमा छ।

فِي عَامَيْنِ أَنِ اشْكُرْ لِي وَلِوَالِدَيْكَ إِلَيَّ الْمَصِيرُ ﴿١٤﴾

त्यसको दूध छुट्टयाउन दुई वर्षमा छ[1] कि तिमी मेरो तथा आफ्ना माता-पिताको कृतज्ञता व्यक्त गर, मतिरै फर्केर आउनुछ ।

وَإِن جَاهَدَاكَ عَلَىٰ أَن تُشْرِكَ بِي مَا لَيْسَ لَكَ بِهِ عِلْمٌ فَلَا تُطِعْهُمَا وَصَاحِبْهُمَا فِي الدُّنْيَا مَعْرُوفًا وَاتَّبِعْ سَبِيلَ مَنْ أَنَابَ إِلَيَّ ثُمَّ إِلَيَّ مَرْجِعُكُمْ فَأُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿١٥﴾

(१५) तथा यदि ती दुबै तिमीमाथि यस कुराको दबाव पार्छन् कि तिमी म सँग साझेदार बनाउ जसको तिमीलाई ज्ञान नहोस्, त तिमी उनको भनाई नमान्नू, परन्तु संसारमा उनीसँग सुचारु रुपमा निर्वाह गर्नु तथा त्यसको मार्गमा हिंड्नू जो मतिर झुकेको होस् ।[2] तिमी सबैलाई म तिरै फर्कनु छ, तिमी जे-जति गर्दछौ त्यसबाट पछि म तिमीलाई सूचित गरिदिनेछु ।[3]

[1]यसबाट ज्ञात भयो कि माताका स्तनबाट दूध खुवाउने अवधि दुई वर्ष छ, यसभन्दा अधिक होइन ।

[2]अर्थात् ईमान भएकाहरुको मार्ग ।

[3]अर्थात् मतिर ध्यान लगाउनेहरु (ईमान भएकाहरु) को अनुसरण यसकारण गर कि अन्तमा तिमी सबैलाई मेरै समक्ष प्रस्तुत हुनुपर्नेछ, तथा मतिरैबाट प्रत्येकलाई त्यसका (राम्रा अथवा नराम्रा) कर्महरुको बदला (प्रतिफल) प्राप्त हुनुछ । यदि तिमी मेरो मार्गको अनुसरण गर्नेछौ तथा मलाई स्मरण गर्दै जीवन व्यतीत गर्नेछौ त आशा छ कि केयामतका दिन मेरा न्यायलयमा सफल हुनेछौ अन्यथा यसका विपरीत परिस्थितिमा मेरा यातनाहरुबाट पीडित हुनेछौ । यो वाक्य आदरणीय लुक़मानको वसीयत (उपदेश) सित सम्बन्धित थियो । अब अगाडी पुन: तीनै वसीयतहरुको वर्णन छ, जो लुक़मानले आफ्नो पुत्रलाई गरेको थियो । मध्येका दुई आयतहरुमा अल्लाह तआलाले वाक्य प्रसँगका रुपमा माता-पितासँग सद्व्यवहार गर्नमाथि जोड दिइयो, जसको एक कारण त यो वर्णन गरिएको छ कि लुक़मानले यो सदुपदेश आफ्नो पुत्रलाई दिएका थिएनन् किनकि यसमा स्वयं उनको आफ्नो लाभ पनि थियो । दोस्रो, यो अस्पष्ट हुन जाओस् कि अल्लाहको एकता एवं भक्तिका पश्चात माता-पिताको सेवा तथा आज्ञपालन आवश्यक छ । तेस्रो यो कि शिर्क यति ठूलो पाप हो कि यदि त्यसको आदेश माता-पिता पनि देऊन् त उनको कुरो मान्नु हुँदैन ।

يٰبُنَيَّ إِنَّهَآ إِن تَكُ مِثْقَالَ حَبَّةٍ مِّنْ خَرْدَلٍ فَتَكُن فِي صَخْرَةٍ أَوْ فِي ٱلسَّمَٰوَٰتِ أَوْ فِي ٱلْأَرْضِ يَأْتِ بِهَا ٱللَّهُ ۚ إِنَّ ٱللَّهَ لَطِيفٌ خَبِيرٌ ﴿١٦﴾

(१६) प्रिय पुत्र ! यदि कुनै वस्तु रायोको दानाको समान होस्[1] अनि त्यो पनि कुनै पत्थरमुनि होस् अथवा आकाशहरुमा होस् अथवा धर्तीमा होस्, त्यसलाई अल्लाह (तआ़ला) ले अवश्य ल्याउनेछ, अल्लाह (तआ़ला) अत्यन्त सूक्ष्मदर्शी तथा ज्ञाता छ ।

يٰبُنَيَّ أَقِمِ ٱلصَّلَوٰةَ وَأْمُرْ بِٱلْمَعْرُوفِ وَٱنْهَ عَنِ ٱلْمُنكَرِ وَٱصْبِرْ عَلَىٰ مَآ أَصَابَكَ ۖ إِنَّ ذَٰلِكَ مِنْ عَزْمِ ٱلْأُمُورِ ﴿١٧﴾

(१७) हे मेरा प्रिय पुत्र ! तिमी नमाज़ स्थापित राख्नु, राम्रा कार्यहरुका लागि आदेश दिन् तथा नराम्रा कुराहरुबाट रोक्नु, यदि तिमीमाथि संकट आइपर्छ भने धैर्य राख्नु,[2] (विश्वास गर) कि यी ठूला साहसिक कार्यहरुमध्ये हुन् ।[3]

[1] إِن تَكُ को संकेत خطيئة हो त अर्थ पाप तथा अल्लाहको अवज्ञाको कार्य हो तथा त्यसको संकेत خَصْلَة हो त अर्थ राम्रो अथवा नराम्रो आचरण हुन्छ । अर्थ यो हो कि मनुष्य असल अथवा नराम्रा कार्य चाहे जति लुकाएर गरोस्, अल्लाहबाट लुकाउन सक्दैन, केयामतका दिन अल्लाहले त्यसलाई प्रस्तुत गर्नेछ अर्थात त्यसको प्रतिफल दिनेछ । असल कामको प्रतिफल पुण्य तथा कुकर्महरुको प्रतिफल दण्ड । रायोका दानाको उदाहरण यसकारण दिइयो कि त्यो यति सानो हुन्छ कि जसको भारको आभास हुँदैन न तौलमा तुलालाई झुकाउन सक्छ । यसैप्रकार चट्टान (आबादीबाट टाढा जङ्गल, पर्वतमा) लुक्नुको सुरक्षित स्थान हो । यो विषय हदीसमा पनि वर्णन गरिएको छ । भनियो, यदि तिमीमध्ये कोही व्यक्ति छिद्र नभएको पत्थरमा पनि कर्म गर्नेछ, जसको न कोही द्वार होस्, न झ्याल, अल्लाह तआ़ला मानिसहरुमा त्यो प्रकट गरिदिनेछ, चाहे त्यो जस्तोसुकै कर्म होस् (मुसनद अहमद ३/२८) । यसकारण कि त्यो सूक्ष्मदर्शी छ, त्यसको ज्ञान अत्याधिक गुप्त कुराहरुसम्म छ तथा خبير (जान्ने भएको) छ, अँध्यारो रात्रिमा हिंड्ने कमिलाका आवागमनसित पनि त्यो राम्ररी परिचित छ ।

[2] सत्कर्मको आदेश, दुष्कर्मबाट रोक्नु एवं नमाज़को स्थापना तथा दुखहरुमा धैर्यको यसकारण चर्चा गरिएको छ कि यी तीनवटै अत्याधिक महत्वपूर्ण उपासना तथा पुण्यका कार्यहरुका आधारशीला हुन् ।

[3] अर्थात् उपरोक्त कुरा ती कार्यहरुमध्ये हुन् जसमाथि अल्लाह तआ़लाले बल दिएको छ तथा भक्तहरुमाथि अनिवार्य गरिएको छ । अथवा यो प्रलोभन हो साहस तथा उत्साह उत्पन्न गर्नुको किनकि बिना साहस एवं उत्साह आज्ञापालन सम्भव छैन । केही व्याख्याकारहरुका निकट

(१८) तथा मानिसहरुका समक्ष आफ्नो अनुहार गमक्क नपार,[1] तथा धर्तीमा अट्टेरी भई अहङ्कारले नहिंड,[2] कुनै अहंकारी घमण्डी व्यक्तिलाई अल्लाह (तआला) रुचाउँदैन।

وَلَا تُصَعِّرْ خَدَّكَ لِلنَّاسِ وَلَا تَمْشِ فِي الْأَرْضِ مَرَحًا ۖ إِنَّ اللَّهَ لَا يُحِبُّ كُلَّ مُخْتَالٍ فَخُورٍ ﴿١٨﴾

(१९) तथा आफ्नो हिंडाइमा मध्यमता राख,[3] तथा

وَاقْصِدْ فِي مَشْيِكَ وَاغْضُضْ

ذلك को संकेत धैर्य हो। यसभन्दा पूर्व सत्कर्मको आदेश एवं नराम्रो कुरामा रोकको उपदेश छ तथा यस मार्गमा कठिनाई, कष्ट, दुख, धिक्कार एवं निन्दा आवश्यक छ। यसकारण यसका तुरुन्त पश्चात धैर्यको शिक्षा दिइयो तथा यो स्पष्ट गरियो कि धैर्यलाई नगुमाउनु कि यो साहस तथा उत्साहका कार्यहरुमध्ये हो तथा साहसी एवं उत्साहीको एउटा ठूलो शस्त्र। यो नभईकन आमन्त्रणको कर्तव्य पालन असम्भव छ।

[1]अर्थात् गर्व नगर कि मानिसहरुलाई तुच्छ ठान तथा जब उनीहरु तिमीसित कुरा गर्न चाहन्छन् त तिमी उनीबाट मुख फर्काइ अथवा वार्तालाप गर्दाखेरि उनीसित मुख फर्काएर राख। صعر एक रोग हो, जो ऊँटका टाउका अथवा गर्दनमा हुन्छ जसबाट उसको गर्दन बटारिन्छ। यहाँ अहंकारका रुपमा मुख फर्काउनुको अर्थमा प्रयोग भएको छ।

[2]अर्थात् यस्तो आचरण अथवा व्यवहार जसबाट माल तथा धन अथवा मान एवं मर्यादा अथवा शक्तिका कारण गर्वका अहंकारको प्रदर्शन हुन्छ, यो अल्लाहलाई अप्रिय छ, यसकारण कि मनुष्य एउटा विवश भक्त हो। अल्लाह तआलालाई यही प्रिय छ कि आफ्नो स्थितिको अनुसार नम्रता तथा कोमलता नै धारण गरोस्, यसको उल्लंघन गरेर ठूलोपनाको प्रदर्शन नगरोस् किनकि ठूलोपना त केवल अल्लाहकै लागि छ जो समस्त अधिकारहरुको स्वामी हो तथा समस्त गुणहरुको स्रोत हो। यसैकारण हदीसमा भनिएको छ, "त्यो व्यक्ति स्वर्गमा जानेछैन, जसको हृदयमा तोरीका दानाका समान पनि अहङ्कार हुनेछ।" (मुसनद अहमद १/४१२, तिर्मिजी अबवाबुल बिर्रे, माजअ फिल किब्र) जो अहंकारका कारण लुगालाई तान्दै (घिसार्दै) हिंड्ने छ, अल्लाह उसतिर (केयामतका दिन) कृपादृष्टि ले देख्ने छैन। (मुसनद अहमद ५/९,१० तथा हेर्नुस् अल-बुख़ारी किताबुल लिबास)। तैपनि गर्वको प्रदर्शन नगरी अल्लाहद्वारा प्रदानहरुको वर्णन अथवा राम्रा वस्त्र तथा भोजन आदिको प्रयोग उचित छ।

[3]अर्थात् हिंडाइ यति सुस्त नहोस् कि जस्तो कोही रोगी होस् तथा न यति तीव्र गतिले होस् कि मान-सम्मानका विरुद्ध होस्। यसैलाई अन्य स्थानमा यसप्रकार वर्णन गरिएको छ, ﴿يَمْشُونَ عَلَى الْأَرْضِ هَوْنًا﴾

"अल्लाहका भक्त धर्तीमा मान एवं शान्तिका साथ हिंड्छन्।" (सूरः अल-फ़ुरक़ान-६३)

مِنْ صَوْتِكَ ۚ إِنَّ أَنكَرَ الْأَصْوَاتِ لَصَوْتُ الْحَمِيرِ ﴿١٩﴾

आफ्नो स्वर सानो राख,[1] निःसन्देह अत्याधिक नराम्रो ध्वनि गधाको ध्वनि हो ।

أَلَمْ تَرَوْا أَنَّ اللَّهَ سَخَّرَ لَكُم مَّا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ وَأَسْبَغَ عَلَيْكُمْ نِعَمَهُ ظَاهِرَةً وَبَاطِنَةً ۗ وَمِنَ النَّاسِ مَن يُجَادِلُ فِي اللَّهِ بِغَيْرِ عِلْمٍ وَلَا هُدًى وَلَا كِتَابٍ مُّنِيرٍ ﴿٢٠﴾

(२०) के तिमी देख्दैनौ कि अल्लाह (तआला) ले धर्ती तथा आकाशको प्रत्येक वस्तुलाई हाम्रो सेवामा लगाएको छ[2] तथा तिमीलाई आफ्नो प्रत्यक्ष तथा अप्रत्यक्ष उपकार पूर्णतया प्रदान गरेको छ ।[3] केही मानिस अल्लाहका विषयमा ज्ञान नभईकन, बिना निर्देश तथा बिना दिव्य शास्त्रका झगडा गर्दछन् ।[4]

[1]अर्थात् चर्को स्वरमा चिच्याएर कुरा नगर, यसकारण कि यदि उच्च ध्वनिमा कुरा गर्न प्रिय भएको भए गधाको आवाज सबभन्दा राम्रो ठानिन्थ्यो, तर यस्तो छैन, बरु गधाको आवाज सबभन्दा नराम्रो तथा घृणित छ । यसकारण हदीसमा भनिएको छ कि गधाको आवाज सुन्छौ भने शैतानबाट सुरक्षा माँग (बुख़ारी किताब बदयिल ख़लकि तथा मुस्लिम आदि)

[2]अधीनकरणको अर्थ हो लाभ लिनु, जसलाई यहाँ "सेवामा लगाइदियो" बाट व्यक्त गरिएको छ, जस्तै आकाशको सृष्टि, चन्द्रमा, सूर्य ताराहरु आदि हुन् । उनीहरुलाई अल्लाह तआलाले ती नियमहरुका अधीन गरिदिएको छ कि यी मनुष्यहरुका लागि कार्य गरिराखेका छन् तथा मनुष्य उनीबाट लाभान्वित भइराखेको छ । तथा दोस्रो अर्थ अधीन गर्नुको आज्ञाकारी बनाइदिनु हो । अतः धेरैजसो धर्तीको सृष्टिलाई मनुष्यको अधीन बनाइदियो जसलाई मनुष्य इच्छा अनुसार प्रयोग गर्दछ । जस्तै धर्ती (भूमि) तथा पशु आदि छन् । मानौं अधीन गर्नुको अर्थ यो भयो कि आकाश तथा धर्तीका समस्त वस्तुहरु मनुष्यका लाभका लागि कार्यमा लागेका छन् । चाहे तिनी मनुष्यका आधीन तथा त्यसका अर्न्तगत प्रयोगमा होऊन् अथवा त्यसका प्रयोग तथा आधीनताबाट टाढा होऊन् । (फ़तहुल क़दीर)

[3]प्रत्यक्षबाट ती सुख सुविधाहरु हुन्, जसका ज्ञान बुद्धि एवं इन्द्रियहरु आदिबाट सम्भव होस् तथा गुप्त उपहारहरुसित तात्पर्य ती जसका संवेदन तथा अनुभव मनुष्यलाई छैन । यी दुबै प्रकारका सुख-सुविधाहरु यति छन् कि मनुष्य उनको गणना पनि गर्न सक्दैन ।

[4]अर्थात् यसका उपरान्त पनि मानिस अल्लाहका विषयमा झगडा गर्छन्, कोही उहाँको अस्तित्वको विषयमा कोही उहाँको साझेदार बनाउनमा तथा उहाँका आदेश तथा नियमहरुका विषयमा ।

وَإِذَا قِيلَ لَهُمُ اتَّبِعُوا مَا أَنزَلَ اللَّهُ قَالُوا بَلْ نَتَّبِعُ مَا وَجَدْنَا عَلَيْهِ آبَاءَنَا ۚ أَوَلَوْ كَانَ الشَّيْطَانُ يَدْعُوهُمْ إِلَىٰ عَذَابِ السَّعِيرِ ﴿٢١﴾

(२१) तथा जब उनीसित भनिन्छ कि अल्लाह (तआलाबाट) अवतरित गरिएको प्रकाशना (वह्य) को पालना गर, त भन्दछन् कि हामीले त जुन मार्गमा[१] आफ्ना पूर्वजहरुलाई पाएका छौं त्यसैको अनुसरण गर्नेछौं, चाहे शैतान उनका पूर्वजलाई नरकको यातनातिर बोलाएको होस् ।

وَمَن يُسْلِمْ وَجْهَهُ إِلَى اللَّهِ وَهُوَ مُحْسِنٌ فَقَدِ اسْتَمْسَكَ بِالْعُرْوَةِ الْوُثْقَىٰ ۗ وَإِلَى اللَّهِ عَاقِبَةُ الْأُمُورِ ﴿٢٢﴾

(२२) तथा जो व्यक्ति आफ्ना अनुहारलाई (स्वयंलाई) अल्लाहप्रति समर्पित गर्दछ[२] तथा त्यो छ पनि सदाचारी,[३] त वस्तुतः उसले सुदृढ कडा (सहारा) समात्यो,[४] सबै कर्महरुको परिणाम अल्लाहतिर छ ।

وَمَن كَفَرَ فَلَا يَحْزُنكَ كُفْرُهُ ۚ إِلَيْنَا مَرْجِعُهُمْ فَنُنَبِّئُهُم بِمَا عَمِلُوا ۚ إِنَّ اللَّهَ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ﴿٢٣﴾

(२३) तथा काफिरहरुका कुफ्रबाट तपाईं दुखी नहुनु[५] अन्तमा ती सबैलाई हामीतिर फर्कनुछ, त्यस समय उनीद्वारा गरिएको कुरा हामीले उनीलाई बताइदिनेछौं[६] निःसन्देह अल्लाह हृदयहरु भित्रसम्मका कुरासित अवगत छ ।[७]

[१]अर्थात् आश्चर्य यो छ कि उनीसित न त बौद्धिक तर्क छ न कुनै मार्गदर्शकको मार्गदर्शन तथा न कुनै आकाशीय पुस्तकबाट कुनै प्रमाण । जस्तो कि हातमा तलवार नलिइ लड्छन् ।

[२]अर्थात् केवल अल्लाहका प्रसन्नताका लागि कर्म गर्दछन्, त्यसका आदेशहरुको पालना तथा त्यसका धर्म विधान आदिको अनुसरण गर्छन् ।

[३]अर्थात् आदेश दिइएका कुराहरुको पालन तथा मनाही गरिएका कुराहरुलाई त्यागनेहरु ।

[४]अर्थात् अल्लाहसित उसले वचन लिइहाल्यो कि त्यसले उसलाई यातना दिनेछैन ।

[५]यसकारण कि ईमानको सौभाग्य नै उनका भाग्यमा छैन । तपाईंको आफ्नो प्रयत्न आफ्नो स्थानमा उचित छ तथा तपाईंको इच्छा पनि प्रशंसायोग्य छ, परन्तु अल्लाहको भाग्य(लेख तथा इच्छा सर्वोपरि छ ।

[६]अर्थात् उनका कर्महरुको प्रतिफल दिनेछ ।

[७]तसर्थ उसबाट कुनै कुरा गुप्त रहन सक्दैन ।

نُمَتِّعُهُمْ قَلِيلًا ثُمَّ نَضْطَرُّهُمْ إِلَىٰ عَذَابٍ غَلِيظٍ ﴿٢٤﴾

(२४) हामी उनीहरुलाई केही यसै पनि लाभ पुऱ्याइदिन्छौं, तर अन्तत: हामीले उनीहरुलाई अत्यन्त विवशताको स्थितिमा घोर यातनाहरुतिर धपाउने छौं ।[1]

وَلَئِن سَأَلْتَهُم مَّنْ خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ لَيَقُولُنَّ اللَّهُ ۚ قُلِ الْحَمْدُ لِلَّهِ ۚ بَلْ أَكْثَرُهُمْ لَا يَعْلَمُونَ ﴿٢٥﴾

(२५) तथा यदि तपाईं उनीसित सोध्नुहुन्छ कि आकाश तथा धर्तीको विधाता को हो ? त यिनीहरु अवश्य उत्तर दिनेछन्, अल्लाह,[2] त भनिदिनुस् कि समस्त प्रशंसाहरुका योग्य अल्लाह नै छ,[3] परन्तु तिनीहरुमध्ये अधिकतर मानिस अन्जान छन् ।

لِلَّهِ مَا فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ إِنَّ اللَّهَ هُوَ الْغَنِيُّ الْحَمِيدُ ﴿٢٦﴾

(२६) आकाशहरुमा तथा धर्तीमा जे-जति छ त्यो सबै अल्लाहकै हो,[4] निश्चय नै अल्लाह (तआला) अत्यन्त निस्पृह[5] एवं महिमा एवं प्रशंसाका योग्य छ ।[6]

وَلَوْ أَنَّمَا فِي الْأَرْضِ مِن شَجَرَةٍ أَقْلَامٌ وَالْبَحْرُ يَمُدُّهُ مِن بَعْدِهِ

(२७) तथा समस्त धर्तीका वृक्षहरु यदि कलमहरु भइहालून् तथा समस्त समुद्रहरु मसी भइहालून् तथा उनका पश्चात सात समुद्र अन्य होऊन्

[1]अर्थात् संसारमा कहिलेसम्म रहनेछन् तथा त्यसका स्वाद एवं सुख-सुविधाहरुबाट कहिलेसम्म आनन्दित हुनेछन् ? यो संसार तथा सुख-सुविधाहरुका केही दिनका लागि हुन्, त्यसका पश्चात उनका लागि घोर यातनाहरु नै छन् ।

[2]अर्थात् उनलाई यो स्वीकार्य छ कि आकाश तथा धर्तीको स्रष्टा अल्लाह नै हो, न कि ती देवता जसको उनीहरु पूजा गर्दछन् ।

[3]यसकारण उनका यस स्वीकारबाट उनीमाथि स्थापित भयो ।

[4]अर्थात् उनको स्रष्टा पनि त्यही हो, स्वामी पनि त्यही तथा पालनकर्ता एवं समस्त जगत्को व्यवस्था गर्ने पनि त्यही हो ।

[5]निस्पृह छ आफूवाहेकवाट अर्थात प्रत्येक वस्तु त्यसको स्पृही छ तथा त्यो निस्पृह छ ।

[6]आफ्नो समस्त पैदा गरिएका वस्तुहरुमा । त उसले जे-जति पैदा गऱ्यो तथा जो आदेश अवतरित गऱ्यो, त्यसमाथि आकाश तथा धर्तीमा समस्त प्रशंसा एवं गुणगान, योग्य मात्र त्यही छन् ।

سَبْعَةُ أَبْحُرٍ مَّا نَفِدَتْ كَلِمَٰتُ ٱللَّهِ ۗ إِنَّ ٱللَّهَ عَزِيزٌ حَكِيمٌ ﴿٢٧﴾

तैपनि अल्लाहको प्रशंसा समाप्त हुनसक्दैन ।[1] निःसन्देह अल्लाह (तआला) प्रभावशाली तथा प्रज्ञ छ ।

مَّا خَلْقُكُمْ وَلَا بَعْثُكُمْ إِلَّا كَنَفْسٍ وَٰحِدَةٍ ۗ إِنَّ ٱللَّهَ سَمِيعٌۢ بَصِيرٌ ﴿٢٨﴾

(२८) तिमी सबैको उत्पत्ति तथा मरणोपरान्त जीवित गर्नु यस्तै छ, जस्तो एक प्राणको,[2] निःसन्देह अल्लाह (तआला) सबै सुन्दछ तथा देख्दछ ।

أَلَمْ تَرَ أَنَّ ٱللَّهَ يُولِجُ ٱلَّيْلَ فِى ٱلنَّهَارِ وَيُولِجُ ٱلنَّهَارَ فِى ٱلَّيْلِ وَسَخَّرَ ٱلشَّمْسَ وَٱلْقَمَرَ كُلٌّ يَجْرِىٓ إِلَىٰٓ أَجَلٍ مُّسَمًّى

(२९) के तपाईं देख्नुहुन्न कि अल्लाह (तआला) रातलाई दिनमा तथा दिनलाई रातमा प्रविष्ट गरिदिन्छ ।[3] सूर्य तथा चन्द्रमालाई उसैले आज्ञाकारी बनाएको छ कि प्रत्येक एउटा

[1]यसमा अल्लाह तआलाको महिमा, महानता प्रताप उसका सर्वोत्तम नामहरु तथा सर्वोत्तम गुणहरु तथा त्यसका ती शब्द जो उसको महिमासित अवगत गराउँछन् उनको वर्णन हो, उनीहरु यति छन् कि कसैका लागि उनलाई हेर्ने अथवा उनको जानकारी अथवा उनका तथ्य एवं वास्तविकतासम्म पुग्न सम्भव छैन । यदि कोही उसको गणना गर्न तथा लिखित रुपमा ल्याउन चाहन्छ भने संसारका समस्त वृक्षलाई कलम बनाऊन् तथा समस्त समुद्रको पानीलाई मसी बनाएर लेख्न चाहून् तथा तिनी समाप्त भइहालून्, परन्तु अल्लाहका ज्ञान, त्यसको सृष्टि एवं कलाकृतिको विचित्रता एवं त्यसको महिमा तथा प्रतापका प्रतीकहरुको गणना गर्न सकिँदैन । सात समुद्र अतिश्योक्तिका रुपमा हो, परिधिमा लिनुको उद्देश्य होइन । यसकारण कि अल्लाहका आयत एवं शब्दहरुलाई सीमित गर्नु सम्भव छैन । (इब्ने कसीर) यस भावार्थको आयत सूरः कहफ़का अन्तमा गुज्रिसकेको छ ।

[2]अर्थात् त्यसको शक्ति यति अपरम्पार छ कि तिमी सबैलाई पैदा गर्ने अथवा प्रलयका दिन जीवित गर्नु, एक प्राणीलाई पैदा गर्नु अथवा जीवित गर्नुका समान छ । यसकारण कि त्यो जे-जति चाहन्छ शब्द كُنْ (कुन) बाट तत्क्षण उत्पन्न अस्तित्वमा आइहाल्छ ।

[3]अर्थात् रात्रिको केही भाग लिएर दिनमा सम्मिलित गर्दछ, जसबाट दिन ठूलो तथा रात्रि सानो हुन्छ । जस्तो ग्रीष्म ऋतुमा हुन्छ । अनि दिनको केही भाग लिएर रात्रिमा सम्मिलित गरिदिन्छ जसबाट दिन सानो तथा रात्रि ठूलो हुन्छ जस्तो शीत ऋतुमा हुन्छ ।

وَأَنَّ اللَّهَ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿٢٩﴾

निर्धारित समयसम्म चलिरहन्छ,[1] अल्लाह (तआला) प्रत्येक त्यस कर्मसित जो तिमी गर्दछौ अवगत छ ।

ذَٰلِكَ بِأَنَّ اللَّهَ هُوَ الْحَقُّ وَأَنَّ مَا يَدْعُونَ مِن دُونِهِ الْبَاطِلُ وَأَنَّ اللَّهَ هُوَ الْعَلِيُّ الْكَبِيرُ ﴿٣٠﴾

(३०) यो सबै (प्रबन्ध) यसकारण छ कि अल्लाह (तआला) सत्य छ तथा त्यसका अतिरिक्त ज-जसलाई मानिसहरु पुकार्दछन् सबै असत्य छन्[2] तथा निःसन्देह अल्लाह (तआला)

[1]"निर्धारित समयसम्म" सित तात्पर्य केयामत (प्रलय) सम्म छ अर्थात् सूर्य एवं चन्द्रमाका उदय एवं अस्तको यो व्यवस्था जसलाई अल्लाहले उनलाई आबद्धि गरेको छ, केयामतसम्म यसैप्रकार निरन्तर रहने छ । दोस्रो अर्थ हो एउटा "निर्धारित लक्ष्यसम्म" अर्थात् अल्लाहले तिनको परिक्रमाका लागि एउटा लक्ष्य तथा एउटा परिधि निर्धारित गरेको छ । जहाँ उनको यात्रा समाप्त हुन्छ तथा अर्को दिन फेरि त्यहाँबाट प्रारम्भ भई प्रथम लक्ष्यसम्म आएर रोकिन्छ । एक हदीसमा पनि यस तथ्यको पुष्टि हुन्छ । नवी सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय अबूज़र सित भन्नुभयो थाहा छ, कि यो सूर्य कहाँ जान्छ (अस्त हुन्छ) ? अबूज़र (رضي الله عنه) भन्नुहुन्छ कि मैले भने, "अल्लाह तथा त्यसका रसूल राम्ररी जान्दछन् ।" भन्नुभयो : त्यसको अन्तिम स्थान अर्श इलाही हो, यो त्यहाँ जान्छ तथा अर्शमुनि सजदा (ढोग) गर्दछ, अनि (त्यहाँबाट निस्कने) आफ्ना प्रभुसित आज्ञा माँग्दछ । एउटा समय आउनेछ कि त्यसलाई भनिनेछ "ارْجِعِي مِنْ حَيْثُ جِئْتِ" तिमी जहाँबाट आएका छौ त्यहीं फर्किजाउ ।" त त्यो पूर्वबाट उदय हुने स्थानमा पशि्चमबाट उदय हुनेछ । जस्तो कि केयामत निकट आउनुका लक्षणमा आउँछ । (सहीह बुख़ारी किताबुत् तौहीद तथा मुस्लिम किताबुल ईमान बाब बयान अज़्जमनि अल्लजी ला युक़बलु फीहि अल ईमान) आदरणीय इब्ने अब्बास (رضي الله عنهما) भन्नुहुन्छ, सूर्य रहटको जस्तो छ, दिनमा आकाशहरुको परिधिमा चलिरहन्छ, जब अस्त हुन्छ त रात्रिमा धर्तीका मुनि आफ्ना पथमा चलिरहन्छ यहाँसम्मकि पूर्वबाट उदय हुन्छ । यसैप्रकार चन्द्रमाको अवस्था छ । (इब्ने कसीर)

[2]अर्थात् यो प्रवन्ध तथा निशानीहरु अल्लाह तआला तिम्रा लागि प्रकट गर्दछ ताकि तिमी जानीहाल कि समस्त जगत्को प्रवन्ध चलाउने केवल एक अल्लाह छ, जसका आदेश एवं इच्छा अनुसार यो सबैकुरा भइराखेको छ, तथा त्यसका अतिरिक्त सबै झूठा छ अर्थात् कसैको कुनै अधिकार छैन, बरु सबै उसैका अधीन छन् किनकि सबै उसैका सृष्टि हुन् तथा उसका अधीन छन्, उनीहरुमध्ये कुनै पनि एउटा कणलाई पनि हल्लाउने शक्ति राख्दैनन् ।

प्रयत्न उच्च एवं अत्यन्त महान छ ।[1]

(३१) के तिमी यस कुरामा विचार गर्दैनौ कि जलमा डुङ्गाहरु अल्लाहका अनुग्रहले चलिराखेका छन् यसकारण कि त्यसले तिमीलाई आफ्ना चिन्ह देखाओस्[2] निःसन्देह यसमा प्रत्येक धैर्यवान एवं कृतघ्नका लागि धेरै निशानीहरु छन् ।

أَلَمْ تَرَ أَنَّ الْفُلْكَ تَجْرِي فِي الْبَحْرِ بِنِعْمَتِ اللَّهِ لِيُرِيَكُم مِّنْ آيَاتِهِ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّكُلِّ صَبَّارٍ شَكُورٍ ﴿٣١﴾

(३२) तथा जब उनीमाथि धाराहरु ती छत्रहरुको जस्तै छाइहाल्छन्, त उनीहरु (अत्यन्त) विश्वास गरेर अल्लाह (तआ़ला) उनीहरुलाई छुट्कारा दिलाएर थलतिर पुऱ्याउँछ, त केही उनीहरुमध्ये सन्तुलित रहन्छन्,[4] तथा हाम्रा

وَإِذَا غَشِيَهُم مَّوْجٌ كَالظُّلَلِ دَعَوُا اللَّهَ مُخْلِصِينَ لَهُ الدِّينَ فَلَمَّا نَجَّاهُمْ إِلَى الْبَرِّ فَمِنْهُم مُّقْتَصِدٌ ۚ وَمَا يَجْحَدُ بِآيَاتِنَا إِلَّا كُلُّ

[1]त्यसभन्दा उत्तम महिमावान कोही छ न त्यसभन्दा महान कोही । त्यसको अपरम्पार महिमा, सर्वोत्तम पद तथा प्रशंसाका समक्ष हरेक वस्तु तुच्छ एवं पतीत छ ।

[2]यो समुद्रमा डुङ्गाहरु चल्नु, यो पनि त्यसको अनुग्रह एवं दयाको प्रदर्शन हो तथा त्यसलाई अधीन बनाउनुको सामर्थ्य एउटा नमूना हो । त्यसले वायु एवं जल दुवैलाई यस्ता उचित ढङ्गले राख्यो कि समुद्रको सतहमा डुङ्गाहरु चल्न सकून्, अन्यथा त्यो चाहन्छ भने वायुको तीव्रता तथा धाराहरुका तरङ्गबाट डुङ्गाहरुको सञ्चालन असम्भव हुनसक्छ ।

[3]विपदामा धैर्य राख्नेहरु, सुख-शान्तिमा अल्लाहको कृतज्ञता गर्नेहरु ।

[4]अर्थात् जब यिनका डुङ्गाहरु यस्तो तूफानी धाराहरुमा घेरिन्छन्, जो बादल एवं पर्वतहरुको जस्तो हुन्छन् तथा मृतका भुजाहरु उनीहरुलाई आफ्नो पकडमा लिन प्रतीत हुन थाल्छन्, त त्यस पश्चात सारा सांसारिक देवता उनको मस्तिष्कबाट निस्केर जान्छन् तथा केवल आकाशीय परमपूज्यलाई पुकार्दछन्, जो वास्तवमा सत्य पूज्य छ ।

[5]केही ज्ञाताहरुले مُقْتَصِد को अर्थ भनेका छन् कि वचनको निर्वाह गर्ने, अर्थात् केही ईमान, एकेश्वरवाद तथा आज्ञापालनका त्यस वचनमा दृढ रहन्छन्, जो तूफानी पकडमा उनीहरुले गरेका थिए । यिनीहरुका निकट यस वाक्यमा लोप छ, वास्तविक कथन यसप्रकार हुनेछ فَمِنْهُم مُقْتَصِد و منهم كافر त केही उनीहरुमध्ये ईमान भएका तथा केही काफ़िर हुन्छन् । (फ़तहुल क़दीर) अरु व्याख्याकारहरुका निकट यसको अर्थ हो मध्यम मार्गमा रहने तथा यो पनि नकारात्मकको अध्यायमा हुनेछ । अर्थात् यति भयानक परिस्थिति एवं त्यस पश्चात त्यहाँ आफ्नो

خَتَّارٍ كَفُوْرٍ ۝٣٢

आयतहरुलाई अस्वीकार गर्दछन् जो वचन भङ्ग गर्ने कृतघ्न हुन्छन् ।[1]

يٰٓاَيُّهَا النَّاسُ اتَّقُوْا رَبَّكُمْ وَاخْشَوْا يَوْمًا لَّا يَجْزِيْ وَالِدٌ عَنْ وَّلَدِهٖ ۡوَلَا مَوْلُوْدٌ هُوَ جَازٍ عَنْ وَّالِدِهٖ شَيْـًٔا ۭ اِنَّ وَعْدَ اللّٰهِ حَقٌّ فَلَا تَغُرَّنَّكُمُ الْحَيٰوةُ الدُّنْيَا ۪ وَلَا يَغُرَّنَّكُمْ بِاللّٰهِ الْغَرُوْرُ ۝٣٣

(३३) मानिसहरु ! आफ्नो प्रभुको भय गर तथा त्यस दिनको भय गर, जुन दिन पिता आफ्ना पुत्रलाई कुनै लाभ पुऱ्याउन सक्ने छैन तथा न पुत्र आफ्ना पितालाई अलिकति पनि लाभ पुऱ्याउने हुनेछ,[2] याद राख ! अल्लाहको वचन सत्य छ, हेर ! तिमीलाई सांसारिक जीवन धोखामा नपारोस् तथा न धोखेबाज (शैतान) तिमीलाई धोखामा पारोस् ।

اِنَّ اللّٰهَ عِنْدَهٗ عِلْمُ السَّاعَةِ ۚ وَيُنَزِّلُ الْغَيْثَ ۚ وَيَعْلَمُ مَا فِي الْاَرْحَامِ ۭ وَمَا تَدْرِيْ نَفْسٌ مَّاذَا تَكْسِبُ غَدًا ۭ وَمَا تَدْرِيْ نَفْسٌۢ بِاَيِّ اَرْضٍ

(३४) नि:सन्देह अल्लाह (तआला) सित नै केयामतको ज्ञान छ । त्यही वर्षा गर्छ तथा माताका गर्भमा जे छ त्यसलाई जान्दछ । कोही (पनि) जान्दैन कि भोलि के-कति कमाउने छ ? न कसैलाई यो ज्ञान छ कि कुन धर्तीमा मर्नेछ ।[3] याद राख ! अल्लाह

प्रभुको यति महान निशानीको दर्शन गर्नु तथा अल्लाहका उपकारका उपरान्त कि उसले त्यहाँबाट त्यसलाई मुक्ति प्रदान गऱ्यो, मनुष्य अहिले पनि अल्लाहको पूर्ण इबादत एवं आज्ञापालन गर्दैन ? तथा मध्यम मार्ग अपनाउँछ, जबकि त्यो परिस्थिति, जसबाट गुज्रेर आएको छ, पूर्ण भक्तिका योग्य छ, न कि मध्यम मार्गका । (इब्ने कसीर) परन्तु प्रथम भावार्थ पूर्व वाक्यका अनुसार अधिक निकट छ ।

[1] ختّار द्रोहीका अर्थमा प्रयुक्त छ । वचन भङ्ग गर्ने كفور कृतघ्न ।

[2] جاز कर्ता संज्ञा हो جزى يجزي बाट । साटोमा दिनु । अर्थ यो हो यदि पिता चाहन्छ कि पुत्रलाई बचाउनका लागि आफ्ना प्राणहरुको साटो अथवा पुत्र पिताका लागि प्राणहरुको साटोका रुपमा प्रस्तुत गर्दछ, त त्यहाँ यो सम्भव हुनेछैन । प्रत्येक व्यक्तिलाई आफ्ना कर्महरुको दण्ड भोग्नु पर्नेछ । जब पिता-पुत्र एक-अर्काका काम आउन सक्ने छैनन् त अन्य सम्बन्धिहरुको के स्थान हुनेछ ? तथा उनीहरु कसरी एक-अर्कालाई लाभ पुऱ्याउन सक्नेछन् ?

[3] हदीसमा वर्णित छ कि पाँच वस्तुहरु अप्रत्यक्षका साँचोहरु छन् जसलाई अल्लाहका अतिरिक्त कोही जान्दैन । (सहीह बुख़ारी तफ़सीर सूर: लुक़मान तथा किताबुल इस्तिस्क़ा)

تَمُوتُ إِنَّ اللَّهَ عَلِيمٌ خَبِيرٌ ۝٣٤

(तआ़ला) नै पूर्ण ज्ञान भएको तथा सत्यको ज्ञाता छ ।

## سُورَةُ السَّجْدَةِ

## सूरतुस्सजद :-३२

सूरः सजदा मक्कामा अवतरित तथा यसमा तीस आयतहरु तथा तीन रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं कृपालु छ ।

(१) केयामत समीपस्थ हुनुका लक्षण त नबी सल्लल्लाहु अलैहि वसल्लमले वर्णन गरेका छन् । परन्तु केयामत आउनुको निश्चित ज्ञान अल्लाहका अतिरिक्त कसैलाई छैन, कुनै फरिश्तालाई छैन कुनै पठाइएका सन्देष्टालाई छैन । (२) वर्षाको समस्या यस्तै छ । लक्षण एवं संकेतबाट अनुमान त लगाउन सकिन्छ परन्तु यो कुरा प्रत्येक व्यक्तिका अनुभव एवं दर्शनमा छ कि यो अनुमान कहिल्यै सही हुन्छन् कहिले गलत । यहाँसम्मकि मौसम विभागको घोषणा पनि ठीक हुँदैन । यसबाट ज्ञात हुन्छ कि वर्षाको पनि निश्चित ज्ञान अल्लाहका अतिरिक्त कसैलाई छैन । (३) माता गर्भमा यान्त्रिक साधनद्वारा लिङ्गको अँधुरो अनुमान त शायद संभव छ कि केटो छ कि केटी ? परन्तु माताका गर्भमा पालिनु यो शिशु सौभाग्यशाली छ अथवा अभागी एवं पूरा छ वा अँधूरो, सुन्दर हुन्छ अथवा कुरुप, कालो हुन्छ अथवा गोरो आदि कुराहरुको ज्ञान अल्लाहका अतिरिक्त कसैलाई छैन । (४) मनुष्यले भोलि के गर्नेछ ? कि त्यो धार्मिक काम हुनेछ अथवा सांसारिक ? कसैलाई आगामी दिनका संदर्भमा ज्ञान छैन कि त्यो त्यसको जीवनमा आउने पनि छ अथवा छैन ? तथा यदि आयो पनि त त्यो त्यसमा के गर्नेछ ? (५) मृत्यु कुन ठाउँमा आउनेछ ? घरमा अथवा घरबाहिर, आफ्नो देशमा अथवा परदेशमा, युवा अवस्थामा आउनेछ वा बृद्धावस्थामा । आफ्नो इच्छा कामनाको पूर्तिका पश्चात अथवा पूर्व ? कसैलाई थाहा छैन ।

***सूरः अलिफ. लाम. मीम. अस्सजदः*** हदीसमा वर्णित छ कि नबी सल्लल्लाहु अलैहि वसल्लम शुक्रवारका दिन फज्र (बिहान) को नमाज़मा अलिफ. लाम. मीम. अस्सजदः (तथा दोस्रो रकआत) सूरः दहर पढ्ने गर्नुहुन्थ्यो । (सहीह बुख़ारी तथा मुस्लिम किताबुल जुम्आ) त्यसैप्रकार यो पनि उचित प्रमाणबाट सिद्ध छ कि नबी सल्लल्लाहु अलैहि वसल्लम राति सुत्नुभन्दा पूर्व सूरः अलिफ. लाम. मीम. अस्सजदा तथा सूरः मुल्क पढ्ने गर्नुहुन्थ्यो । (तिर्मिजी संख्या ८९२ तथा मुसनद अहमद ३/३४०)

الٓمٓ ﴿١﴾

(१) अलिफ. लाम. मीम.

تَنزِيلُ الْكِتَابِ لَا رَيْبَ فِيهِ مِن رَّبِّ الْعَالَمِينَ ﴿٢﴾

(२) निःसन्देह यस सत्य-तथ्य किताबको (पवित्र ग्रन्थको) अवरतण समस्त जगत्‌का प्रभुको तर्फबाट छ ।[1]

أَمْ يَقُولُونَ افْتَرَاهُ ۚ بَلْ هُوَ الْحَقُّ مِن رَّبِّكَ لِتُنذِرَ قَوْمًا مَّا أَتَاهُم مِّن نَّذِيرٍ مِّن قَبْلِكَ لَعَلَّهُمْ يَهْتَدُونَ ﴿٣﴾

(३) के यिनीहरु भन्छन् कि यसले त्यसलाई रचेको छ ?[2] होइन-होइन, बरु यो तिम्रा प्रभुको तर्फबाट सत्य छ, ताकि तपाईं उनीहरुलाई तर्साउनुस्, जसका पासमा तपाईंभन्दा पूर्व कोही तर्साउने (सचेतक) आएन,[3] सम्भव छ कि उनीहरु सत्य मार्गमा आइहालून्।

اللَّهُ الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ وَمَا بَيْنَهُمَا فِي سِتَّةِ أَيَّامٍ ثُمَّ اسْتَوَىٰ عَلَى الْعَرْشِ ۖ مَا لَكُم مِّن دُونِهِ مِن وَلِيٍّ وَلَا شَفِيعٍ ۚ

(४) अल्लाह (तआ़ला) त्यो हो जसले आकाशहरु तथा धर्तीलाई तथा जे-जति उनका मध्य छ, सबैथोक छ दिनमा उत्पन्न गऱ्यो अनि अर्शमा उच्चय (आसीन) भयो[4] तिम्रा लागि त्यो बाहेक कोही सहायता गर्ने, अभिस्तावक छैन ।[5]

---

[1]अर्थ यो हो कि यो असत्य, जादु ज्योतिष एवं कथा-कहानीको किताव होइन, बरु अखिल जगतका प्रभुको तर्फबाट मार्गदर्शिका हो ।

[2]यो अपारका रुपमा छ कि के अखिल जगतका प्रभुबाट अवतरित गरिएको यस प्रभावी वाक्य (ग्रन्थ) का विषयमा भन्दछन् कि यसलाई स्वयं (मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम) ले आफै रच्नु भएको छ ।

[3]यो कुर्आनका अवतरण हुनुका कारण हो । यसबाट पनि ज्ञात भयो (जस्तो कि पहिला पनि स्पष्टीकरण गुज्रिसकेको छ) कि अरबहरुमा नबी सल्लल्लाहु अलैहि वसल्लम प्रथम नबी हुनुहुन्थ्यो । केही टीकाकारहरुले आदरणीय शोएबलाई पनि अरबहरुका लागि पठाइएको मानेका छन् । यस आधारमा समुदायको तात्पर्य विशेषरुपले कुरैश हुनेछन् जसतिर कुनै नबी उहाँ सल्लल्लाहु अलैहि वसल्लमभन्दा पूर्व आएन ।

[4]यसका लागि हेर्नुस् सूरः आराफ-५४ को व्याख्या । यहाँ यस विषयको पुनरावृत्ति गर्नुबाट यो उद्देश्य प्रतीत हुन्छ कि अल्लाह तआ़लाको अपार शक्ति एवं विचित्र सृष्टिका वर्णनबाट शायद तिनीहरु कुर्आन सुनुन् तथा त्यसमाथि विचार गरून् ।

[5]अर्थात् त्यहाँ कोही यस्तो मित्र हुनेछैन जसले तिम्रो सहायता गर्नसकोस् तथा तिमी त्यसद्वारा अल्लाहको यातनालाई हटाउन सक, न त्यहाँ कोही सिफारिश गर्नेवाला नै त्यस्तो हुनेछ जो तिम्रो सिफारिश गर्न सकोस् ।

أَفَلَا تَتَذَكَّرُونَ ④

के तैपनि तिमी शिक्षा ग्रहण गर्दैनौ ?[1]

يُدَبِّرُ الْأَمْرَ مِنَ السَّمَاءِ إِلَى الْأَرْضِ ثُمَّ يَعْرُجُ إِلَيْهِ فِي يَوْمٍ كَانَ مِقْدَارُهُ أَلْفَ سَنَةٍ مِّمَّا تَعُدُّونَ ⑤

(५) त्यो आकाशबाट धर्तीसम्म कार्यहरुको साधन गर्दछ ।[2] अनि (त्यो कार्य) यस्तो एक दिनमा उसतिर चढ्छ, जसको अनुमान तिम्रो गणनाका एक हजार वर्षका समान छ ।[3]

ذَٰلِكَ عَالِمُ الْغَيْبِ وَالشَّهَادَةِ الْعَزِيزُ الرَّحِيمُ ⑥

(६) यही हो प्रत्यक्ष तथा अप्रत्यक्षको ज्ञाता प्रभावशाली अत्यन्त कृपालु ।

---

[1]अर्थात् हे अल्लाहका अतिरिक्त अन्यका पुजारीहरु तथा अन्यहरुमा विश्वास गर्नेहरु ! के तैपनि तिमी शिक्षा ग्रहण गर्दैनौ ।

[2]आकाशबाट जहाँ अल्लाहको अर्श (सिंहासन) तथा सुरक्षित पुस्तक (लौह महफूज) छ, अल्लाह तआ़ला धर्तीमा आफ्ना आदेश अवतरित गर्दछ अर्थात् उपाय गर्दछ तथा धर्तीमा त्यसको पालन हुन्छ । जस्तो जीवन मरण, स्वास्थ्य र रोग, प्रदान तथा अवयध, धन तथा दरिद्रता, युद्ध एवं सन्धि, मान तथा अपमान आदि । अल्लाह तआ़ला अर्श माथिबाट आफूले लेखिएका भाग्यका अनुसार यो प्रबन्ध एवं अधिपत्य गर्दछ ।

[3]अर्थात् पछि उसको यो उपाय तथा आदेश उसैतिर फर्कन्छ, एकै दिनमा, जसलाई फरिश्ता लिएर जान्छन् तथा उक्लिनु तथा आउने-जाने दूरी यति छ कि फरिश्ताहरुका अतिरिक्त अन्य हजार वर्षहरुमा तय गर्दछन् । अथवा यसबाट केयामतका दिन तात्पर्य छ कि त्यसदिन मनुष्यहरुका जो कर्म अल्लाहका सदनमा प्रस्तुत हुनेछन् । त्यस दिनका निर्धारण एवं व्याख्यामा टीकाकारहरुका मध्य अत्याधिक मतभेद छ । इमाम शौकानीले १५, १६ कथन यस विषयमा उधृत गरेका छन् । यसकारण आदरणीय इब्ने अब्बासले यस सम्बन्धमा मौनधारण गर्नलाई उचित ठानेका छन् तथा त्यसको वास्तविकतालाई अल्लाहमाथि छाडिदिएका छन् । ऐसरुत्तफासीरका रचयिता भन्दछन् कि कुरआनमा यो तीन स्थानमा आएको छ तथा तीनै स्थानहरुमा भिन्न-भिन्न तात्पर्य छ । सूर: हज आयत ४७ (يوم) 'योम'शब्दसित तात्पर्य त्यो काल अथवा अवधि हो कि जो अल्लाहसित छ तथा सूर: मआरिज़मा जहाँ 'योम' सित तात्पर्य संसारको अन्तिम दिन हो, जब संसारका अन्तका साथै व्यवस्था तथा उपायको पनि अन्त हुनेछ ।

(७) जसले अत्यन्त सुन्दर बनायो जुन पनि वस्तु बनायो[१] तथा मनुष्यको उत्पत्ति माटोबाट प्रारम्भ गऱ्यो ।[२]

الَّذِي أَحْسَنَ كُلَّ شَيْءٍ خَلَقَهُ وَبَدَأَ خَلْقَ الْإِنسَانِ مِن طِينٍ ⑦

(८) अनि त्यसको वंश एउटा तुच्छ पानीका सारतत्वबाट बनायो ।[३]

ثُمَّ جَعَلَ نَسْلَهُ مِن سُلَالَةٍ مِّن مَّاءٍ مَّهِينٍ ⑧

(९) जसलाई ठीक-ठाक पारी त्यसमा आफ्नो प्राण फुक्यो,[४] तथा उसैले तिम्रा कान, आँखा तथा हृदय बनाए ।[५] (त्यसपछि पनि) तिमी साह्रै कम कृतज्ञता गर्दछौ ।[६]

ثُمَّ سَوَّاهُ وَنَفَخَ فِيهِ مِن رُّوحِهِ وَجَعَلَ لَكُمُ السَّمْعَ وَالْأَبْصَارَ وَالْأَفْئِدَةَ قَلِيلًا مَّا تَشْكُرُونَ ⑨

[१]अर्थात् जो वस्तु पनि अल्लाहले बनाएको छ, त्यो त्यसको तत्वदर्शीता एवं हितकारिताको माँगसित (अभिप्राय) छ, यसकारण त्यसमा आफ्नो एउटा सुन्दरता एवं आकर्षण छ । त्यसो त उसद्वारा बनाइएको प्रत्येक वस्तु सुन्दर एवं आकर्षक छ तथा केही ज्ञाताहरुले أحسن को अर्थ أتقن و أحكم सित लिएका छन् अर्थात् प्रत्येक वस्तु सुदृढ एवं पक्का बनायो । केही विद्वानहरुले यसलाई ألهم का भावार्थमा लिएका छन्, अर्थात् प्रत्येक सृष्टिलाई ती कुराहरुबारे भन्यो, जसको उनीहरुलाई आवश्यकता छ ।

[२]अर्थात् प्रथम मनुष्य आदमलाई माटोले बनायो, जसबाट मनुष्यहरुको आरम्भ भयो तथा उनकी पत्नी आदरणीय हव्वालाई आदमको बायाँ करङबाट पैदा गऱ्यो, जस्तो कि हदीसबाट ज्ञात हुन्छ ।

[३]अर्थात् वीर्यको थोपाबाट अर्थ यो हो कि एउटा मनुष्यको जोडी बनाउनुका पश्चात, त्यसका वंशजका लागि यो विधि निर्धारित गऱ्यो कि स्त्री-पुरुष आपसमा विवाह गरून्, उनका संगमबाट जो पानीको थोपा, स्त्रीका गर्भाशयका जानेछ, त्यसबाट हामी एउटा मनुष्यको शरीर बनाएर पठाउँदै रहन्छौं ।

[४]अर्थात् त्यस शिशुको, माताका पेटमा पालन-पोषण गर्दछ, त्यसका अङ्ग बनाउँछौं तथा सिंगारछौं तथा पछि त्यसमा आत्मा फुक्दछौं ।

[५]अर्थात् यी सारा वस्तुहरु पैदा गऱ्यो ताकि त्यसले आफ्नो सृष्टिलाई परिपूर्ण गऱ्यो त तिमी प्रत्येक सुनिने कुरालाई सुन्न सक, देखिने वस्तुलाई देख्न सक, तथा प्रत्येक मस्तक एवं बुद्धिमा घूस्ने कुरोलाई बुझ्न सक ।

[६]अर्थात् यति अनुग्रहका उपरान्त मनुष्य यति कृतघ्न छ कि अल्लाहको साह्रै कम कृतज्ञता व्यक्त गर्दछ अथवा कृतज्ञता व्यक्त गर्नेहरु नै अल्पसंख्यामा छन् ।

وَقَالُوٓا۟ أَءِذَا ضَلَلْنَا فِى ٱلْأَرْضِ أَءِنَّا لَفِى خَلْقٍ جَدِيدٍۭ ۚ بَلْ هُم بِلِقَآءِ رَبِّهِمْ كَـٰفِرُونَ ﴿١٠﴾

(१०) तथा उनीहरुले भने कि के हामी जब धर्तीमा विलीन भैइसकेका हुनेछौं[1] त के पछि नयाँ जीवनमा आउनेछौं ? बरु (कुरो यो हो) कि उनीहरुलाई आफ्ना प्रभुका साक्षात्कार प्रभुका मिलनका विश्वास छैन ।

قُلْ يَتَوَفَّىٰكُم مَّلَكُ ٱلْمَوْتِ ٱلَّذِى وُكِّلَ بِكُمْ ثُمَّ إِلَىٰ رَبِّكُمْ تُرْجَعُونَ ﴿١١﴾

(११) भनिदिनुस् ! कि तिमीलाई यमदूत (मृत्युको फरिश्ता) ले मार्नेछ जो तिमीमाथि नियुक्त गरिएको छ ।[2] त्यस पश्चात तिमी सबै आफ्ना प्रभुतिर फर्काइनेछौ ।

وَلَوْ تَرَىٰٓ إِذِ ٱلْمُجْرِمُونَ نَاكِسُوا۟ رُءُوسِهِمْ عِندَ رَبِّهِمْ رَبَّنَآ أَبْصَرْنَا وَسَمِعْنَا فَٱرْجِعْنَا نَعْمَلْ صَـٰلِحًا إِنَّا مُوقِنُونَ ﴿١٢﴾

(१२) तथा काश कि तपाईं देख्नुहुन्थ्यो जबकि पापीहरु आफ्ना प्रभुका समक्ष टाउका निहुराएका हुनेछन्,[3] भन्नेछन् कि हे हाम्रा प्रभु ! हामीले देखिहाल्यौं तथा सुनिहाल्यौं,[4] अब तिमी हामीलाई फिर्ता पठाइदेऊन् त पुण्यका कार्य गर्नेछौं, हामी विश्वास भएका हौं ।[5]

وَلَوْ شِئْنَا لَـَٔاتَيْنَا كُلَّ نَفْسٍ هُدَىٰهَا وَلَـٰكِنْ حَقَّ ٱلْقَوْلُ مِنِّى

(१३) तथा यदि हामीले चाहेको भए त प्रत्येक व्यक्तिलाई मार्गदर्शन प्राप्त गरिदिने थियौं,[6] परन्तु मेरो यो

[1]जब कुनै वस्तुमाथि कुनै अन्य वस्तु प्रभावी हुन्छ तथा प्रथमका समस्त प्रभाव समाप्त हुनजान्छ, त त्यसलाई ضَلالت (गुमिनु) भन्दछन् । ضَللنا في الأرض को अर्थ हुन्छ कि जब माटोमा मिसिएर हाम्रो अस्तित्व गुमिने छ ।

[2]अर्थात् उसको कार्य नै यही हो कि जब तिम्रो मृत्युको समय आइपुग्नेछ, त आएर प्राण निकाल्नेछ ।

[3]अर्थात् आफ्ना कुफ्र तथा शिर्क एवं पापका कारण अथवा अपमानका कारण ।

[4]अर्थात् जसलाई भुठ्लाउँथे, त्यसलाई देखिहालें, जसलाई अस्वीकार गर्दथे, त्यसलाई सुनिहालें । अथवा तिम्रो निषेधाज्ञाको सत्यतालाई देखिहाले तथा सन्देष्टाहरुको पुष्टिलाई सुनें, परन्तु त्यस समयको देख्नु-सुन्नु उनलाई कुनै काम आउने छैन ।

[5]परन्तु अब विश्वास गऱ्यो त के लाभ ? अब त अल्लाहको यातना उनीमाथि सिद्ध भइसकेको छ, जसलाई भोग्नु पर्नेछ ।

[6]अर्थात् संसारमा यदि यो मार्गदर्शन दबाबमा भएको भए, जसमा परीक्षाको अवसर हुने थिएन ।

لَأَمْلَأَنَّ جَهَنَّمَ مِنَ الْجِنَّةِ وَالنَّاسِ أَجْمَعِينَ ﴿١٣﴾

कुरा पूर्णतः सत्य भइसकेको छ कि म अवश्य नरकलाई मनुष्य तथा जिन्नहरुले भरिदिनेछु ।[१]

فَذُوقُوا بِمَا نَسِيتُمْ لِقَاءَ يَوْمِكُمْ هَٰذَا إِنَّا نَسِينَاكُمْ وَذُوقُوا عَذَابَ الْخُلْدِ بِمَا كُنْتُمْ تَعْمَلُونَ ﴿١٤﴾

(१४) अब तिमी आफ्ना त्यस दिनका मिलनलाई बिर्सिदिनुको स्वाद चाख, हामीले पनि तिमीलाई बिर्सिदियौं[२] आफ्ना गरिएका कर्महरुका (दुष्परिणाम) बाट स्थाई यातनाको आनन्द लिउ ।

إِنَّمَا يُؤْمِنُ بِآيَاتِنَا الَّذِينَ إِذَا ذُكِّرُوا بِهَا خَرُّوا سُجَّدًا وَسَبَّحُوا بِحَمْدِ رَبِّهِمْ وَهُمْ لَا يَسْتَكْبِرُونَ ﴿١٥﴾

(१५) हाम्रा आयतहरुमा तिनै ईमान स्वीकार गर्दछन्,[३] जसलाई जहिलेसुकै शिक्षा दिइन्छ, त सजदामा भुक्छन्,[४] तथा आफ्ना प्रभुको प्रशंसाका साथ त्यसको महिमागान गर्दछन् ।[५] तथा अहङ्कारबाट अलग्ग रहन्छन् ।[६]

[१]अर्थात् मनुष्यहरु दुई प्रकारमध्ये जो नरकमा जानेछन्, उनीबाट नरकलाई भर्ने मेरो कुरा सत्य सिद्ध भयो ।

[२]अर्थात् जुनप्रकार तिमीले हामीलाई संसारमा बिर्सिरहयौ, आज हामी पनि तिमीसित त्यसतै व्यवहार गर्नेछौं, अन्यथा स्पष्ट कुरो छ कि अल्लाह त बिर्सनेवाला छैन ।

[३]अर्थात् मान्दछन् तथा त्यसबाट लाभ उठाउँछन् ।

[४]अर्थात् अल्लाहका आयतहरुको आदर तथा त्यसको पकड तथा यातनाहरुबाट तर्सदै ।

[५]अर्थात् प्रभुलाई यी समस्त कुराहरुबाट पवित्र मान्दछन्, जो उसको महिमाका योग्य नै छैनन् तथा त्यसका उपकारमाथि त्यसको महिमा एवं प्रशंसा गर्दछन्, जसमा सबभन्दा महत्वपूर्ण एवं परिपूर्ण अनुग्रह, ईमानतिर मार्गदर्शनको छ । अर्थात् उनी आफ्ना सजदाहरुमा «سُبْحَانَ اللهِ وَبِحَمْدِهِ» अथवा سبحان ربي العظيم आदि शब्द पढ्दछन् ।

[६]अर्थात् आज्ञापालन एवं आत्म समर्पणको मार्ग अपनाउँछन् । अज्ञानी एवं काफिरहरुको जस्तो गर्दैनन् । यसकारण कि अल्लाहको इबादतबाट अहंकार गर्नु नरकमा जानुको साधन हो ।

﴿إِنَّ الَّذِينَ يَسْتَكْبِرُونَ عَنْ عِبَادَتِي سَيَدْخُلُونَ جَهَنَّمَ دَاخِرِينَ﴾

"निःसन्देह जो मानिस हाम्रा इबादतबाट अहङ्कार गर्दछन् उनीहरु नरकमा अपमानित भई प्रवेश गर्नेछन् ।" (सूरः अल-मोमिन-६०)

تَتَجَافَىٰ جُنُوبُهُمْ عَنِ الْمَضَاجِعِ يَدْعُونَ رَبَّهُمْ خَوْفًا وَطَمَعًا وَمِمَّا رَزَقْنَاهُمْ يُنفِقُونَ ⑯

(१६) उनका कोल्टा आफ्ना ओछ्यानहरुबाट अलग रहन्छन्,[1] आफ्ना प्रभुलाई भय तथा आशाका साथ पुकार्दछन् ।[2] तथा जे-जति हामीले उनीलाई दिएका छौं, त्यो खर्च गर्दछन् ।[3]

فَلَا تَعْلَمُ نَفْسٌ مَّا أُخْفِيَ لَهُم مِّن قُرَّةِ أَعْيُنٍ جَزَاءً بِمَا كَانُوا يَعْمَلُونَ ⑰

(१७) कुनै प्राणी जान्दैन जे-जति हामीले उनका आँखाको शीतलतालाई उनका लागि लुकाएर राखेका छौं,[4] जे-जति गर्दथे यो त्यसको प्रतिफल हो ।[5]

यसकारण ईमान भएकाहरुको आचरण उनका विपरीत हुन्छ, उनीहरु अल्लाहका समक्ष प्रत्येक क्षण नम्रता तुच्छता एवं दरिद्रता तथा एकाग्रता एवं विनम्रताको प्रदर्शन गर्दछन् ।

[1]अर्थात् राती उठेर तहज्जुदको नमाज़ पढ्दछन्, क्षण-याचना, आराधना-उपासना, महिमा एवं प्रशंसा तथा प्रार्थना एवं विन्ति गर्दछन् ।

[2]अर्थात् उसको दया एवं कृपाका साथ उसका उपकार एवं अनुकम्पाको आशा पनि राख्दछन् तथा त्यसका क्रोध एवं प्रकोप तथा पकड एवं यातनाबाट तर्सन्छन् पनि । केवल आशा नै मात्र गर्दैनन्, कि कर्मबाट निश्चिन्त भइहालून् (जस्तो कि कर्म नगर्ने एवं कुकर्मीहरुको कार्य हो) तथा न यातनाको यति भय नै गर्दछन् कि त्यसको दया एवं कृपाबाट निराश होऊन् किनकि यो निराशा पनि कुफ्र एवं कुमार्गताको सूचक हो ।

[3]व्ययमा आवश्यक दान (ज़कात) सामान्यदान (सत्कार) पुण्य दुबै सम्मिलित छन् । ईमान भएकाहरु दुवैको आफ्नो शक्तिभर प्रयोजन गर्दछन् ।

[4] نَفْسٌ जातिवाचक संज्ञा हो जो सर्वसाधारणका अर्थमा छ अर्थात उसलाई अल्लाहका अतिरिक्त कोही पनि जान्दैन । ती उपहारहरुलाई जो उक्त ईमानवालाहरुका लागि लुकाएर राखेको छ, जसबाट उनका आँखा शीतलता प्राप्त हुनेछन् । त्यसको व्याख्यामा नवी सल्लल्लाहु अलैहि वसल्लमले यो हदीस कुद्सी वर्णन गर्नुभएको छ कि अल्लाह तआला भन्दछ कि मैले आफ्ना सदाचारी भक्तहरुका लागि ती वस्तुहरु तयार गरेका छौं जुन कुनै न आँखाले देखेको तथा न कुनै कानले सुनेको न कुनै मनुष्यका ध्यानमा आयो (सहीह बुख़ारी तफसीर सूर: सजद:)

[5]यसबाट ज्ञात भयो कि अल्लाहको कृपा-दयाको योग्य बन्नका लागि पुण्यका कार्य गर्नु आवश्यक छ ।

أَفَمَن كَانَ مُؤْمِنًا كَمَن كَانَ فَاسِقًا لَّا يَسْتَوُونَ ﴿١٨﴾

(१८) के त्यो जो ईमान भएको छ त्यसको समतुल्य छ जो भ्रष्टाचारी छ ?[1] यिनीहरु समान हुन सक्दैनन् ।

أَمَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فَلَهُمْ جَنَّاتُ الْمَأْوَىٰ نُزُلًا بِمَا كَانُوا يَعْمَلُونَ ﴿١٩﴾

(१९) जसले ईमान स्वीकार गरे तथा पुण्यका कार्य गरे, उनका लागि स्थाई स्वर्ग छ, अतिथि सत्कार छ उनका कर्महरुका प्रतिफल स्वरुप जो उनीहरु गर्दथे ।

وَأَمَّا الَّذِينَ فَسَقُوا فَمَأْوَاهُمُ النَّارُ كُلَّمَا أَرَادُوا أَن يَخْرُجُوا مِنْهَا أُعِيدُوا فِيهَا وَقِيلَ لَهُمْ ذُوقُوا عَذَابَ النَّارِ الَّذِي كُنتُم بِهِ تُكَذِّبُونَ ﴿٢٠﴾

(२०) तथा परन्तु जसले आदेशहरुको अवहेलना गरे, उनीहरुको वासस्थान नरक छ, जतिखेर पनि त्यसबाट निस्कन चाहनेछन् त्यसैमा फर्काइनेछन् ।[2] तथा भनिनेछ कि[3] आफूद्वारा झुठ्लाउनुको परिणाम स्वरुप अग्निको स्वाद चाख ।

وَلَنُذِيقَنَّهُم مِّنَ الْعَذَابِ الْأَدْنَىٰ دُونَ الْعَذَابِ الْأَكْبَرِ

(२१) तथा वस्तुतः हामी उनीहरुलाई निकटको सानो चाहिं केही यातनाहरुलाई[4] त्यस ठूलो यातनाका



[1]यो प्रश्न नकारात्मक छ अर्थात् अल्लाहका समक्ष ईमान भएका तथा काफिर समान हुन सक्दैनन्, वरु तिनीहरुका बीच निकै अन्तर एवं दूरी हुनेछ । ईमान भएका अल्लाहका अतिथि हुनेछन् तथा मान-सम्मानका अधिकारी हुनेछन् । तथा अवहेलना गर्नेहरु काफिर कष्ट तथा दुःखहरुको नेलमा जकडिएर नरकको अग्निमा पोलिनेछन् । यस विषयलाई अन्य स्थानमा पनि वर्णन गरिएको छ । जस्तो सूरः अल-जासिया-२१, सूरः साद-२८, सूरः अल-हश्र-२० आदि ।

[2]अर्थात् नरकको यातनाको कडाई तथा भयानकताबाट आत्तिएर बाहिर निस्कन चाहनेछन्, त फरिश्ताहरु पुनः उनीहरुलाई नरकको गहिराईमा धकेलि दिनेछन् ।

[3]यी फरिश्ताहरु भन्नेछन् अथवा अल्लाहको तर्फबाट आकाशवाणी हुनेछ, जे-पनि होस् यसमा ती झुठ्लाउनेहरुका अपमान तथा अनादरको जुन सामग्री छ, त्यो लुकेको छैन ।

[4]निकट यातना (निकटका केही यातनाहरु) सित सांसारिक यातनाहरु अथवा सांसारिक दुख एवं रोग आदिको तात्पर्य छ । केहीका निकट ती हत्याहरु यसबाट तात्पर्य छन्, जसबाट बद्रका युद्धमा काफिर पीडित भए । अथवा त्यो अकाल हो, जो मक्कावासीहरुलाई परेको थियो । इमाम शौकानी भन्नुहुन्छ यी समस्त अवस्था एवं परिस्थितिहरु यसमा सम्मिलित हुनसक्छ ।

لَعَلَّهُمْ يَرْجِعُونَ ﴿٢١﴾

अतिरिक्त चखाउनेछौं ताकि उनी फर्किआऊन् ।[1]

وَمَنْ أَظْلَمُ مِمَّن ذُكِّرَ بِآيَاتِ رَبِّهِ ثُمَّ أَعْرَضَ عَنْهَا ۚ إِنَّا مِنَ الْمُجْرِمِينَ مُنتَقِمُونَ ﴿٢٢﴾

(२२) तथा त्यसभन्दा बढी अत्याचारी को होला जसले अल्लाह तआलाका आयतहरुबाट भाषण दिइयो तैपनि त्यसले तिनीबाट मुख फर्कायो,[2] निश्चय हामी पनि पापीहरुसित प्रतिशोध लिनेवाला छौं ।

وَلَقَدْ آتَيْنَا مُوسَى الْكِتَابَ فَلَا تَكُن فِي مِرْيَةٍ مِّن لِّقَائِهِ ۖ وَجَعَلْنَاهُ هُدًى لِّبَنِي إِسْرَائِيلَ ﴿٢٣﴾

(२३) तथा वास्तवमा हामीले मूसालाई किताब (ग्रन्थ) प्रदान गर्‍यौं, तसर्थ तपाईंले कदापि त्यसका मिलनमा शंका गर्नु हुँदैन ।[3] तथा हामीले त्यसलाई[4] इस्राईलको सन्तानका मार्गदर्शनको साधन बनायौं ।

وَجَعَلْنَا مِنْهُمْ أَئِمَّةً يَهْدُونَ بِأَمْرِنَا لَمَّا صَبَرُوا ۖ وَكَانُوا بِآيَاتِنَا يُوقِنُونَ ﴿٢٤﴾

(२४) तथा हामीले उनीहरुमाथि, किनकि उनीहरुले धैर्य-धारण गरे, यस्ता अगुवा बनायौं, जो हाम्रा आदेशले मानिसहरुको मार्गदर्शन गर्दथे तथा हाम्रा आयतहरुमा विश्वास राख्दथे ।[5]

---

[1] यो आख़िरतका महाप्रकोपभन्दा पूर्व साना प्रकोप पठाउनुको कारण हो कि शायद उनीहरु कुफ्र तथा शिर्कका पापका मार्ग छाडिदेऊन् ।

[2] अर्थात् अल्लाहका आयतहरु सुनेर जो ईमान तथा आज्ञापालनको हेतु छ, जो व्यक्ति यसबाट विमुख हुन्छ, त्यसभन्दा ठूलो अत्याचारी को छ ? अर्थात् यही सबभन्दा ठूलो अत्याचारी हो ।

[3] भनिन्छ कि यो संकेत त्यस मिलनतिर छ जो मिराजको रात्रि (आकाश यात्राको रात्रि) नबी सल्लल्लाहु अलैहि वसल्लमको आदरणीय मूसासित भयो, जसमा आदरणीय मूसाले नमाज़हरुमा कमी गराउनुको सल्लाह दिनुभएको थियो ।

[4] (त्यसलाई) सित तात्पर्य किताब (तौरात) हो अथवा स्वयं आदरणीय मूसा अलैहिस्सलाम ।

[5] यस आयतबाट धैर्यको महत्व प्रकट हुन्छ । धैर्य एवं संयमको अर्थ हो कि अल्लाहका आदेशहरुका पालन गर्न तथा पापलाई छाड्नमा तथा अल्लाहका सन्देष्टाहरुको पुष्टि एवं उनका अनुसरणमा जो कष्ट सहन गर्नुपर्‍यो, तिनलाई प्रसन्नतापूर्ण सहन गर्नु । अल्लाहले भन्नुभयो : उनीबाट धैर्य राख्न तथा अल्लाहका आयतहरुमा विश्वास गर्नका कारण हामीले उनलाई धार्मिक अगुवाई एवं प्रतिनिधित्वका स्थानमा नियुक्त

إِنَّ رَبَّكَ هُوَ يَفْصِلُ بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ فِيمَا كَانُوا فِيهِ يَخْتَلِفُونَ ﴿٢٥﴾

(२५) तपाईंको प्रभु ती दुबैका बीच यी समस्त कुराको निर्णय केयामतका दिन गर्नेछ, जसमा उनीहरु मतभेद गरिराखेका छन् ।[1]

أَوَلَمْ يَهْدِ لَهُمْ كَمْ أَهْلَكْنَا مِنْ قَبْلِهِمْ مِنَ الْقُرُونِ يَمْشُونَ فِي مَسَاكِنِهِمْ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ ۖ أَفَلَا يَسْمَعُونَ ﴿٢٦﴾

(२६) के यस कुराले पनि उनीहरुलाई मार्गदर्शन प्रदान गरेन कि हामीले उनीभन्दा पूर्वका धेरै समुदायहरुलाई ध्वस्त गरिदियौं, जसका आवासहरुमा यिनीहरु हिंड्डुल गरिराखेका छन् ।[2] त्यसमा त ठूला-ठूला शिक्षाहरु छन् । के तैपनि यिनीहरु सुन्दैनन् ।

أَوَلَمْ يَرَوْا أَنَّا نَسُوقُ الْمَاءَ إِلَى الْأَرْضِ الْجُرُزِ فَنُخْرِجُ بِهِ زَرْعًا تَأْكُلُ مِنْهُ أَنْعَامُهُمْ وَأَنْفُسُهُمْ ۖ أَفَلَا يُبْصِرُونَ ﴿٢٧﴾

(२७) के यिनीहरु देख्दैनन् कि हामी पानीलाई बाँझो (निर्जन) धर्तीतिर बगाएर लग्छौं । अनि त्यसबाट हामी कृषि उब्जाउँछौं । जसलाई उनका पशु एवं उनी स्वयं खान्छन्[3] के तैपनि यिनीहरु देख्दैनन् ?

गरिदियौं, तर जब उनीहरुले त्यसका विपरीत परिवर्तन एवं संशोधनका कार्य प्रारम्भ गरिदिए, त उनीबाट यी पद खोसिए । अत: त्यसका पश्चात उनका हृदय साह्रो भइहाले, अनि न उनको कर्म सदाचारी रहयो न उनका विश्वास ठीक रहयो ।

[1]यसबाट त्यो मतभेद तात्पर्य छ जो अहले किताबमा आपसमा व्याप्त थियो, यसका अतिरिक्त ती मतभेद पनि आउँछन्, जो ईमान भएका तथा काफ़िर, सत्यवादी एवं अज्ञानीहरु तथा एकेश्वरवादी एवं बहुईश्वरवादीहरु मध्ये संसारमा रहे, तथा छन् । किनकि संसारमा प्रत्येक गुट आफ्ना तर्कका आधारमा सन्तुष्ट तथा आफ्ना मार्गमा दृढ रहन्छ । यसकारण यी मतभेदहरुको निर्णय केयामतका दिन अल्लाह तआला गर्नेछ, जसको अर्थ यो हो कि सत्यवादीहरुलाई स्वर्गमा तथा काफ़िरहरु एवं अन्धकारमा भौंतारिनेहरुलाई नरकमा हाल्नेछ ।

[2]अर्थात् विगत समुदाय, जो झुठ्लाउन एवं ईमानबाट शून्य हुनका कारण नाश भए, के यिनीहरु देख्दैनन् कि आज संसारमा उनको अस्तित्व शेष रहेन, तर उनका घर छन्, जसका यिनीहरु उत्तराधिकारी बनेका छन् । अर्थ यसको मक्कावासीहरुलाई चेतावनी छ कि तिम्रो पनि परिणाम यस्तो नै हुनसक्छ, यदि ईमान स्वीकार गरेनौ ।

[3]पानीसित तात्पर्य आकाशीय वर्षा तथा स्रोत, कुलो एवं घाटीहरुको पानी हो जसलाई अल्लाह तआला बाँझो तथा निर्जन स्थानतिर बगाएर लग्छ तथा त्यसबाट पैदावार

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْفَتْحُ إِن كُنتُمْ صَادِقِينَ ﴿٢٨﴾

(२८) तथा भन्दछन् कि यो निर्णय कहिले हुनेछ ? यदि तिमी साँचो हौ भने बताउ ?[1]

قُلْ يَوْمَ الْفَتْحِ لَا يَنفَعُ الَّذِينَ كَفَرُوا إِيمَانُهُمْ وَلَا هُمْ يُنظَرُونَ ﴿٢٩﴾

(२९) उत्तर दिइहाल कि निर्णयका दिन ईमान स्वीकार गर्नु बेइमानीहरुलाई कुनै काम आउने तथा न उनीहरुलाई छुट दिइनेछ ।[2]

فَأَعْرِضْ عَنْهُمْ وَانتَظِرْ

(३०) अब तपाईं यिनीहरुको विचार पनि छाडिदिनुस् ।[3]

---

हुन्छ, जो मनुष्य खान्छ तथा जो भूसा एवं चारा हुन्छ, त्यो पशुहरु खान्छन् । यसबाट तात्पर्य कुनै विशेष क्षेत्र एवं भूमि होइन, बरु सामान्य हो, जो प्रत्येक निर्जन, बाँझो समतल भूमिलाई सम्मिलित गर्दछ ।

[1]यस निर्णय (विजय) सित तात्पर्य अल्लाह तआलाको त्यो प्रकोप हो जो मक्काका काफिर नबी सल्लल्लाहु अलैहि वसल्लमबाट माँग्ने गर्दथे तथा भन्ने गर्दथे कि हे मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) तिम्रो अल्लाहका सहायता तिम्रो लागि कहिले आउने छ, जसबाट तिमी हामीलाई तर्साउन्छौ । अहिले त हामी यही देखिराखेका छौं कि तिमीमाथि ईमान स्वीकार गर्नेहरु लुकेर हिंड्छन् ।

[2]यस विजय दिवसबाट तात्पर्य आखिरतका निर्णयको दिन हो, जहाँ न ईमान स्वीकार गरिनेछ तथा न अवसर प्रदान गरिनेछ । मक्का विजयको दिन होइन किनकि त्यसदिन طلقاء को इस्लाम स्वीकार गरिएको थियो जसको संख्या लगभग दुई हजार थियो । (इब्ने कसीर) طلقاء बाट अभिप्राय, ती मक्कावासी हुन् जसलाई नबी सल्लल्लाहु अलैहि वसल्लमले मक्काको विजयका दिन दण्ड एवं संज्ञा दिनुको साटो क्षमा गरिदिनु भयो तथा यो भनेर स्वतन्त्र गरिदिनु भएको थियो कि आज तिम्रो पूर्वकालिक कुरता एवं अत्याचारको प्रतिशोध लिइने छैन । अतः उनको बहुमत मुसलमान भएको थियो ।

[3]अर्थात् यी मूर्तिपूजकहरुबाट विमुख भईदिनुस् तथा उपदेश एवं आमन्त्रणको कार्य आफ्नो ढङ्गले गर्दैरहनुस्, जो प्रकाशना तपाईं सल्लल्लाहु अलैहि वसल्लममाथि गरिएको छ त्यसको अनुसरण गर्नुस् । जस्तो अन्य स्थानमा भन्यो :

﴿اتَّبِعْ مَا أُوحِيَ إِلَيْكَ مِن رَّبِّكَ لَا إِلَٰهَ إِلَّا هُوَ وَأَعْرِضْ عَنِ الْمُشْرِكِينَ﴾

"तपाईं स्वयं त्यस मार्गमा हिंड्नुस् जसको प्रकाशना तपाईंको प्रभुतिरबाट तपाईंको पासमा आएको छ । अल्लाहका अतिरिक्त कोही सच्चा पूज्य छैन र बहुईश्वरवादीहरुलाई बेवास्ता गर्नुस्" (सूरः अल-अनाम-१०६)

إِنَّهُم مُّنتَظِرُونَ ۝٣٠

तथा प्रतीक्षामा रहनुस्[१] यिनीहरु पनि प्रतीक्षा गरिराखेका छन ।[२]

## سُورَةُ الأَحْزَابِ

## सूरतुल अहज़ाब-३३

सूरः अहज़ाब मदीनामा उत्रेको तथा यसमा ७३ आयतहरु तथा ९ रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

يَا أَيُّهَا النَّبِيُّ اتَّقِ اللَّهَ وَلَا تُطِعِ الْكَافِرِينَ وَالْمُنَافِقِينَ ۗ إِنَّ اللَّهَ كَانَ عَلِيمًا حَكِيمًا ۝١

(१) हे नबी ! अल्लाह तआलासित तर्सदैं रहनु[३] तथा काफ़िर एवं मुनाफ़िकहरुको कुरामा नआउनु, अल्लाह तआला सर्वज्ञ तत्वदर्शी छ ।[४]

[१]अर्थात् अल्लाहका वचनबारे कि त्यो कहिले पूरा हुन्छ तथा तिम्रा विरोधीहरुमाथि तिमीलाई कहिले प्रभुत्व प्रदान गर्दछ ? त्यो अवश्य पूरा भएर नै रहन्छ ।

[२]अर्थात् यी काफ़िर प्रतीक्षामा छन् कि शायद यो रसूल नै कालचक्रको शिकार होस् तथा त्यसको आमन्त्रण समाप्त भएर जाओस् । तर संसारले देखिहाल्यो कि अल्लाहले आफ्ना नबीलाई दिइएका सबै वचनहरुलाई पूरा गऱ्यो तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि कालचक्रसित ग्रसित हुने कुराका प्रतीक्षा गर्नेहरुलाई लज्जित एवं अपमानित गऱ्यो अथवा उनीहरुलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमको दास बनाइदियो ।

[३]आयतमा संयममाथि नित्यता तथा धर्मका प्रचार-प्रसारमा दृढताको आदेश छ । तलक बिन हबीब भन्नुहुन्छ संयमको अर्थ हो कि अल्लाहको आज्ञापालन अल्लाहद्वारा प्रदान गरिएको प्रकाशका अनुसार गर्नुस् तथा अल्लाहसित पुण्यको आशा राख्नुस् तथा अल्लाहको अवज्ञा अल्लाहद्वारा प्रदान गरिएको प्रकाशका आधारमा छाडिदिनुस्, अल्लाहका प्रकोपसित तर्सदै । (इब्ने कसीर)

[४]तसर्थ त्यही यस कुराको अधिकारी छ कि त्यसको आज्ञापालन गरियोस् यसकारण कि परलोकलाई त्यही जान्दछ तथा आफ्ना कथन तथा वचन एवं कार्यहरुमा त्यो निपुण छ ।

وَّاتَّبِعۡ مَا یُوۡحٰۤی اِلَیۡكَ مِنۡ رَّبِّكَ ؕ اِنَّ اللّٰهَ كَانَ بِمَا تَعۡمَلُوۡنَ خَبِیۡرًا ۙ﴿۲﴾

(२) तथा जे-जति तपाईंतिर तपाईंको प्रभुतिरबाट प्रकाशना (वह्य) गरिन्छ[1] त्यसको पालन गर्नुस् (विश्वास गर) कि अल्लाह तिम्रा प्रत्येक कर्मसित परिचित छ ।[2]

وَّتَوَكَّلۡ عَلَی اللّٰهِ ؕ وَكَفٰی بِاللّٰهِ وَكِیۡلًا ﴿۳﴾

(३) तथा तपाईं अल्लाहमाथि नै भरोसा राख्नुस्[3] अल्लाह काम बनाउनका लागि पर्याप्त छ ।[4]

مَا جَعَلَ اللّٰهُ لِرَجُلٍ مِّنۡ قَلۡبَیۡنِ

(४) कुनै व्यक्तिको छाति (वक्ष) मा अल्लाहले दुई हृदय राखको छैन[5] तथा

---

[1]अर्थात् कुर्आनको तथा हदीसहरुको पनि, यसकारण कि हदीसहरुका शब्द यद्यपि नबी सल्लल्लाहु अलैहि वसल्लमका पवित्र मुखबाट मुखारित भएका छन्, तर त्यसका अर्थ एवं व्याख्या अल्लाहतिरबाट नै छन् । त्यसैकारण उनको गुप्त प्रकाशना अथवा पाठ नगरिने (अपाठ्य) प्रकाशना भनिन्छ ।

[2]त त्यसबाट तिम्रो कुनै कुरा गुप्त रहन सक्दैन ।

[3]आफ्ना समस्त समस्या एवं परिस्थितिहरुमा ।

[4]ती मानिसहरुका लागि जो त्यसमाथि भरोसा राख्दछन् तथा त्यसतिर आकर्षित हुन्छन् ।

[5]केही कथनहरुबाट यो कुरा ज्ञात हुन्छ कि एउटा मुनाफिक् (अवसरवादी) ले यो दावी गर्दथ्यो कि त्यसका दुई हृदय छन्, एक हृदय मुसलमानहरुका साथ छ तथा दोस्रो कुफ्र एवं काफिरहरुका साथ छ । (मुसनद अहमद १/२६७) यो आयत त्यसका खण्डमा अवतरित भए । अभिप्राय यो हो कि यो सम्भव नै छैन कि एउटा हृदय अल्लाहको प्रेम तथा त्यसका शत्रुहरुको प्रेम, एकत्रित हुनसकोस् । केही ज्ञाताहरु भन्दछन् कि मक्काका मूर्तिपूजकहरुमा एउटा व्यक्ति ज़मील बिन मामर फ़हरी थियो, जो बडो चतुर, पाखण्डी तथा अत्यन्त वाकपटु थियो, त्यसको दावा थियो कि मेरा त दुई हृदय छन्, जसबाट म सोच्दछु, जबकि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) को एउटै हृदय छ । यो आयत त्यसका खण्डनमा अवतरित भयो । (ऐसरुत्तफ़ासीर) केही व्याख्याकार भन्दछन् कि अगाडी दुई समस्याहरुको वर्णन भइरहेको छ, यो उनको प्रस्तावना हो । अर्थात् जुनप्रकार जसरी एउटा व्यक्तिका दुई हृदय हुनसक्दैनन् त्यसैप्रकार यदि कोही व्यक्ति आफ्नो पत्नीसित 'जेहार' गरोस् अर्थात् "यो भनिदेओस् कि तिम्रो पिठ्यूँ मेरो लागि यस्तै छ जस्तो मेरी आमाको पिठ्यूँ ।" त यसप्रकार भन्नाले त्यसकी पत्नी त्यसकी माता बन्ने छैन । जुनप्रकार त्यसकी दुईटा माताहरु हुन सक्दैन, यसैप्रकार कोही व्यक्ति कसैलाई

فِي جَوْفِهِۦۚ وَمَا جَعَلَ أَزْوَاجَكُمُ ٱلَّٰٓـِٔي تُظَٰهِرُونَ مِنْهُنَّ أُمَّهَٰتِكُمْۚ وَمَا جَعَلَ أَدْعِيَآءَكُمْ أَبْنَآءَكُمْۚ ذَٰلِكُمْ قَوْلُكُم بِأَفْوَٰهِكُمْۖ وَٱللَّهُ يَقُولُ ٱلْحَقَّ وَهُوَ يَهْدِي ٱلسَّبِيلَ ④

आफ्ना जुन पत्नीहरुलाई तिमी माता भनिदिन्छौ, तिनीहरुलाई अल्लाहले तिम्रा (वास्तविक) माताहरु बनाएन[1] तथा न तिम्रा (दत्तक) पुत्र बनाइएका बालकहरुलाई (वास्तवमा) तिम्रा पुत्र बनाएको छ ।[2] यो त तिम्रा आफ्ना मुखका कुरा हुन् ।[3] अल्लाह (तआ़ला) सत्य कुरा भन्दछ ।[4] तथा त्यहीं (सोझो) मार्ग दर्शाउँछ ।

ٱدْعُوهُمْ لِءَابَآئِهِمْ هُوَ أَقْسَطُ عِندَ ٱللَّهِۚ فَإِن لَّمْ تَعْلَمُوٓا۟

(५) लेपालकहरु (मुखले भनेका पुत्र) लाई उनका (वास्तविक) पिताहरुतिर सम्बन्धित गरेर बोलाउ । अल्लाहका निकट पूर्ण न्याय यही हो ।[5] अनि यदि

---

आफ्नो पुत्र (दत्तक) बनाउँछ भने त्यसको वास्तविक पुत्र बन्ने छैन, बरु त्यो पुत्र त आफ्नो पिताकै रहनेछ, त्यसका दुई पिता हुन सक्दैनन् । (इब्ने कसीर)

[1]यो समस्यालाई जिहार भनिन्छ, त्यसको विवरण सूर: मुजादिलामा आउनेछ ।

[2]यसको विवरण यसै सूर:मा अगाडी आउनेछ । دعِيّ को बहुवचन أَدْعِيَاء हो, मुखले भनेको पुत्र ।

[3]अर्थात् कसैलाई माता भनिदिनाले त्यो माता बन्ने छैन, न पुत्र भनिदिनाले पुत्र बन्नेछ, अर्थात उनीमाथि मातृत्व तथा पुत्रत्वको धार्मिक विधान लागू हुनेछैन ।

[4]यसकारण त्यसको अनुसरण गर तथा मुखले भनिएको स्त्रीलाई माता तथा काखमा लिएको बालकलाई पुत्र नभन, ध्यान रहोस् कि कसैलाई श्रद्धा मायामा पुत्र भन्नु बेग्लै कुरा हो तथा काखमा लिएको बालकलाई वास्तविक पुत्र मानेर पुत्र भन्नु बेग्लै कुरा हो । प्रथम कुरो मान्य छ, यहाँ उद्देश्य दोस्रो कुराको निषेध गर्नु हो ।

[5]यस आदेशबाट त्यस प्रथालाई निषेध गरिदियो, जो अज्ञानकालदेखि चल्दै आइराखेको थियो तथा इस्लामका प्रारम्भिक कालमा विद्यमान थियो कि काखमा लिई अपनाइएको बालकलाई वास्तविक पुत्र ठानिन्थ्यो । सहाबा किरामको वचन छ कि हामीले ज़ैद बिन हारिसालाई जसलाई रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले स्वतन्त्र गरी पुत्र बनाउनु भएको थियो, ज़ैद बिन मोहम्मद भनेर बोलाउने गर्थ्यौं यहाँसम्मकि कुरआनको आयत ادعوهم لآبائهم अवतरित भइहाल्यो । (सहीह बुख़ारी तफसीर सूर: अहज़ाब) यस आयतका अवतरण पश्चात आदरणीय अबू हुज़ैफाका घरमा समस्या उत्पन्न भयो, जसले सालिमलाई पुत्र बनाएका थिए, जब मुखले भनेको पुत्रलाई वास्तविक पुत्र मान्नुबाट रोकियो,

أَبَآءَهُمْ فَإِخْوَٰنُكُمْ فِى ٱلدِّينِ وَمَوَٰلِيكُمْ ۚ وَلَيْسَ عَلَيْكُمْ جُنَاحٌ فِيمَآ أَخْطَأْتُم بِهِۦ وَلَٰكِن مَّا تَعَمَّدَتْ قُلُوبُكُمْ ۚ وَكَانَ ٱللَّهُ غَفُورًا رَّحِيمًا ۝

तिमीलाई उनका (वास्तविक) पिताको ज्ञान छैन भने उनी तिम्रा धर्मबन्धु एवं मित्र हुन् ।[1] तिमीबाट भूलचुकले जो हुनजान्छ, त्यसमा तिमीमाथि कुनै पाप छैन,[2] तर पाप त्यो हो जसलाई तिमी निश्चय हृदयले गर्छौ ।[3] अल्लाह (तआला) अत्यन्त क्षमा गर्ने दयालु छ ।

ٱلنَّبِىُّ أَوْلَىٰ بِٱلْمُؤْمِنِينَ مِنْ أَنفُسِهِمْ

(६) पैग़म्बर ईमान भएकाहरुमाथि स्वयं उनीभन्दा पनि अधिक अधिकार राख्ने हुन्छन् ।[4] तथा

तसर्थ त्यसबाट पर्दा गर्नु पनि आवश्यक भयो नबी सल्लल्लाहु अलैहि वसल्लमले अबू हुजैफाकि पत्नीसित भन्नुभयो कि त्यसलाई दूध खुवाएर दूधको साझेदार पुत्र बनाइहाल किनकि तिमी त्यसका लागि हराम (अवैध) हुनेछौ । अत: उनले यस्तै गरे । (सहीह मुस्लिम किताबुर्रजाअ, बाब रजाअतिल क़बीर, अबू दाऊद किताबुन्निकाह बाब फ़ीमन हर्रमा बेही)

[1]अर्थात् जसका वास्तविक पिताहरुको ज्ञान छ । अब अन्य सम्बन्ध समाप्त गरी उनैसित उनलाई सम्बन्धित गर । तर जसका पिताहरुको ज्ञान हुन नसकोस् त तिमी उनलाई आफ्ना भाइ तथा मित्र ठान, पुत्र नठान ।

[2]यसकारण कि भूलचुक माफ छ, जस्तो कि हदीसमा पनि व्याख्या छ ।

[3]अर्थात् जो जानी-बुझि गलत सम्बन्धित गर्नेछ, त्यो महापापी हुनेछ । हदीसमा वर्णित छ, "जसले जानी-जानी अन्य पितासित सम्बन्धित गऱ्यो, त्यसले कुफ्रको कार्य गऱ्यो ।" (सहीह बुख़ारी किताबुल मनाक़िब)

[4]नबी सल्लल्लाहु अलैहि वसल्लम आफ्ना समुदायका जति हितैषी एवं शुभचिन्तक थिए, स्पष्टीकरणको आवश्यकता छैन । अल्लाह तआलाले उहाँ सल्लल्लाहु अलैहि वसल्लमका यस प्रेम एवं शुभचिन्तालाई देखेर यस आयतमा उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) लाई ईमानवालाहरुका आफ्ना प्राणभन्दा पनि अधिक प्रेम गर्ने योग्य, तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको प्रेम अन्य समस्त प्रेमभन्दा उच्चतम् तथा उहाँको आदेश आफ्ना समस्त इच्छाहरुभन्दा उत्तम भनेको छ । यसकारण मुसलमानहरुका लागि आवश्यक छ कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम जुन मालको माँग अल्लाहका लागि गर्नुहुन्छ, त्यो उहाँ सल्लल्लाहु अलैहि वसल्लममा निछावर (अर्पण) गरिदेऊन्, चाहे उनीहरुलाई स्वयं जति पनि आवश्यकता भएको होस् । उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई आफ्ना प्राणभन्दा पनि अधिक प्रेम गरून् । (जस्तो आदणीय उमरको घटना हो)

وَأَزْوَاجُهُۥٓ أُمَّهَٰتُهُمْ ۗ وَأُو۟لُوا۟ ٱلْأَرْحَامِ بَعْضُهُمْ أَوْلَىٰ بِبَعْضٍ فِى كِتَٰبِ ٱللَّهِ مِنَ ٱلْمُؤْمِنِينَ وَٱلْمُهَٰجِرِينَ إِلَّآ أَن تَفْعَلُوٓا۟ إِلَىٰٓ أَوْلِيَآئِكُم مَّعْرُوفًا ۚ كَانَ ذَٰلِكَ فِى ٱلْكِتَٰبِ مَسْطُورًا ⑥

पैग़म्बरका पत्नीहरु ईमान भएकाहरुका माताहरु हुन्[1] तथा सम्बन्धी अल्लाहको किताबका आधारमा अन्य ईमानवाला तथा मोहाजिरहरुका अपेक्षा अधिक अधिकारी हुन् ।[2] (हो) तिमीलाई आफ्ना मित्रहरुका साथ सद्व्यवहार गर्नुको आज्ञा छ ।[3] यो आदेश 'सुरक्षित पुस्तक' (लौहे महफूज) मा लेखिएको छ ।[4]

وَإِذْ أَخَذْنَا مِنَ ٱلنَّبِيِّـۧنَ مِيثَٰقَهُمْ وَمِنكَ وَمِن نُّوحٍ وَإِبْرَٰهِيمَ

(७) तथा जबकि हामीले समस्त नबीहरुबाट वचन लियौं (विशेषरुपले) तपाईंसित तथा नूहसित तथा इब्राहीमसित तथा मूसासित तथा

उहाँ सल्लल्लाहु अलैहि वसल्लमको आदेश सर्वोपरि तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको आज्ञा पालनलाई महत्वपूर्ण ठानून् ।

जबसम्म यो आत्मसमर्पण हुनेछैन فلا و ربك لا يؤمنون (सूरः अल-निसा-६५) का अनुसार मनुष्य मुसलमान हुनेछैन । यसैप्रकार जबसम्म उहाँ सल्लल्लाहु अलैहि वसल्लमको प्रेम समस्त प्रेममाथि प्रभावशाली हुनेछैन । (अलहदीस) का आधारमा मुसलमान होइन । ठीक त्यसैप्रकार सन्देष्टाको आज्ञा पालनमा आलस्य पनि "لا يؤمن أحدكم حتى يكون هواه تبعا لما جئت به" का अनुरुप हुनेछन् ।

[1]अर्थात् आदर तथा सम्मान गर्नुमा तथा उनीसित विवाह नगर्नुमा मुसलमान पुरुष तथा मुसलमान महिलाहरुका माता पनि हुन् ।

[2]अर्थात् अब देश त्याग, भाइचारा एवं सन्धिका कारण, उत्तराधिकार हुनेछैन । अब उत्तराधिकार वंशज समीप सम्बन्धको कारण पाउनेछ ।

[3]तर तिमी अन्य मानिसहरुका साथ परोपकार तथा सहायता दिने कार्य गर्न सक्छौ । यसका अतिरिक्त आफ्ना एक तिहाई मालमध्येबाट वसीयत (उत्तरदान) गर्न सक्दछौ ।

[4]अर्थात् सुरक्षित पुस्तकमा मूल आदेश यही छ, यद्यपि अस्थाई रुपमा समय अनुसार अरुहरुलाई पनि उत्तराधिकारी बनाइएको थियो, परन्तु अल्लाहको ज्ञानमा थियो कि यो निरस्त गरिदिइने छ । अत: त्यसलाई निरस्त गरी पूर्वादेशलाई लागू गरियो ।

وَمُوسَىٰ وَعِيسَى ابْنِ مَرْيَمَ ۖ وَأَخَذْنَا مِنْهُم مِّيثَاقًا غَلِيظًا ⑦

मरियमका पुत्र ईसासित र हामीले उनीसित वचन पनि पक्का एवं सुदृढ लियौं ।[1]

لِّيَسْأَلَ الصَّادِقِينَ عَن صِدْقِهِمْ ۚ وَأَعَدَّ لِلْكَافِرِينَ عَذَابًا أَلِيمًا ⑧

(८) ताकि अल्लाह तआ़ला सच्चाहरुसित उनको सत्यताको विषयमा सोधोस्,[2] तथा नमान्नेहरुका लागि हामीले दुखद यातनाहरु तयार गरेका छौं ।

[1]यस वचनबाट के अभिप्राय छ ? केही ज्ञाताहरुका निकट यो त्यो वचन हो जो एक-अर्काको सहायता एवं पुष्टि सन्देष्टाहरुबाट लिइएको थियो जस्तो सूर: आले-इमरानको आयत संख्या ८१ मा छ । केही विद्वानहरुको निकट यो त्यो वचन हो जसको वर्णन सूर: शूराको आयत संख्या १३ मा छ कि धर्मलाई स्थापित गर्नु तथा त्यसमा भेद नपार्नु । यो वचन यद्यपि समस्त सन्देष्टाहरुबाट लिइएको थियो, तर यहाँ विशेष रुपमा पाँच सन्देष्टाहरुको नाम छ, जसबाट उनका महत्व एवं विशेषताको परिलक्षण हुन्छ तथा उनमा पनि नबी सल्लल्लाहु अलैहि वसल्लमको वर्णन सर्वप्रथम छ, जबकि सन्देष्टाका आधारमा उहाँ सल्लल्लाहु अलैहि वसल्लम अन्तिम हुनुहुन्छ, यसबाट उहाँ सल्लल्लाहु अलैहि वसल्लमको मान तथा सम्मानको जुनप्रकार स्पष्टीकरण भइरहेको छ, त्यसको व्याख्या गर्नुको आवश्यकता छैन ।

[2]अर्थात् यो वचन यसकारण लिइयो ताकि अल्लाह सच्चा सन्देष्टाहरुबाट सोधोस् कि उनले अल्लाहको सन्देश आफ्ना समुदायसम्म त्यसैप्रकारले पुऱ्याइदिएका थिए ? अथवा अर्को अर्थ यो हो कि त्यसले सन्देष्टाहरुबाट सोधोस् कि तिम्रो समुदायले तिम्रो आमन्त्रणको उत्तर कुन प्रकार दियो ? सकारात्मक अथवा नकारात्मक जुन प्रकार अन्य स्थानमा छ,

﴿ فَلَنَسْأَلَنَّ الَّذِينَ أُرْسِلَ إِلَيْهِمْ وَلَنَسْأَلَنَّ الْمُرْسَلِينَ ﴾

"हामीले उनीसित पनि सोध्नेछौं जसतिर सन्देष्टा पठाइए तथा सन्देष्टाहरुबाट पनि सोध्नेछौं ।" (सूर: अल-आराफ-६)

यसमा सत्यतिर आमन्त्रित गर्नेहरुलाई पनि चेतावनी छ कि उनी सत्यका उपदेशको दायित्व पूर्ण सतर्कता तथा पूर्ण रुपमा निर्वाह गरून् ताकि अल्लाहका समक्ष सम्मानित हुनसकून् तथा तिनका लागि पनि चेतावनी हो जसलाई सत्यको उपदेश दिइएको छ कि उनीहरु त्यसलाई गर्ने छैनन् भने अल्लाहका समक्ष अपराधी तथा दण्डका भागी ठानिनेछन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ ٱذْكُرُوا۟ نِعْمَةَ ٱللَّهِ عَلَيْكُمْ إِذْ جَآءَتْكُمْ جُنُودٌ فَأَرْسَلْنَا عَلَيْهِمْ رِيحًا وَجُنُودًا لَّمْ تَرَوْهَا ۚ وَكَانَ ٱللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرًا ۝٩

(९) हे ईमानवालाहरु ! अल्लाह तआलाले जो उपकार तिमीमाथि गऱ्यो, त्यसलाई स्मरण गर जबकि तिम्रो सामना गर्नलाई थुप्रै सेनाहरु आए अनि हामीले तिनीहरुमाथि तीव्र गति भएको आँधीबेरी तथा यस्तो सेना पठायौं जसलाई तिमीले देखेनौ,[1] तथा जे-जति तिमी गर्दछौ, अल्लाह (तआला) सबै देख्दछ ।

[1]यस आयतमा अहज़ाबका युद्धको संक्षिप्त जानकारी छ जो पाँच हिज़रीमा घटित भयो । यसलाई अहज़ाब यसकारण भन्दछन् कि यस अवसरमा समस्त इस्लामका शत्रु एकत्रित भएर मुसलमानहरुका केन्द्र मदीनामाथि आक्रमण गर्नका लागि आए । अहज़ाब अरबी भाषामा हिज़ब (गिरोह) को बहुवचन हो । यसलाई खन्दकको युद्ध पनि भन्दछन्, यसकारण कि मुसलमानहरुले मदीनाको रक्षाका लागि मदीना तर्फ खन्दक (चारैतिर खाल्डा) खनेका थिए, ताकि शत्रु मदीनाभित्र आउन नसकून् । यसको संक्षिप्त विवरण यसप्रकार छ कि यहूदीहरुका क़बीला बनू नजीर, जसलाई रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले त्यसबाट निरन्तर वचन भङ्ग गर्नका कारण मदीनाबाट निष्कासित गरिदिनु भएको थियो, यो क़बीला खैबरमा गई आबाद भयो, त्यसले मक्काका काफ़िरहरुलाई मुसलमानहरुमाथि आक्रमण गर्नका लागि उत्तेजित गऱ्यो, यसैप्रकार गत्फ़ान आदि नजद्का कबीलाहरुलाई पनि सहायताको विश्वास दिलाएर युद्धका लागि तयार गरे तथा यसप्रकार यी यहूदी इस्लाम तथा मुसलमानका सबै शत्रुहरुलाई एकत्रित गरी मदीनामाथि आक्रमणकारी हुन सफल भए । मक्काका मूर्तिपूजकहरुको नेतृत्व अबू सुफ़ियानको हातमा थियो, उनीहरुले ओहुदका आसपास पडाव (पाल) हालेर मदीनाको नाकाबन्दी गरिदिए । उनको कूल संख्या लगभग दश हजार थियो । ज़बकि मुसलमान तीन हजार थिए । यसका अतिरिक्त दक्षिणतिर यहूदीहरुको तेस्रो क़बीला बनू कुरैज़ा आबाद थियो, जसमा अहिलेसम्म मुसलमानहरुको सन्धि थियो तथा उनीहरु मुसलमानहरुको सहायता गर्नका लागि बाध्य थियो । तर त्यसलाई पनि बनू नजीरका यहूदी नेता हूय् बिन अख़्तबले भड्काएर मुसलमानहरुमाथि घातक प्रहारका लागि आफ्नो साथमा मिलाइहाल्यो । यसप्रकार मुसलमान चारैतिरबाट शत्रुहरुका घेराभा फँसिहालेका थिए । यस अवसरमा आदरणीय सुलैमान फारसीको सल्लाहमा खन्दक खनियो, जसका कारण शत्रुहरुका सेना मदीनामा आउन सकेनन् तथा मदीनाका बाहिर नै डेरा जमाएर बसिरहे । तैपनि यस नाकाबन्दी तथा शत्रुहरुका संयुक्त आक्रमणबाट मुसलमान अत्याधिक भयभीत थिए । लगभग एक महीनासम्म यो नाकाबन्दी रहयो तथा मुसलमान अत्याधिक भयभीत एवं कठिनाईको परिस्थितिमा थिए । अन्तमा अल्लाह तआलाले ईश्वरीय सहायता मुसलमानहरुलाई प्रदान गऱ्यो । यी आयतहरुमा ती नै भयावह एवं व्याकुलताका परिस्थितिहरुमा ईश्वरीय सहायताको वर्णन छ ।

إِذْ جَآءُوكُم مِّن فَوْقِكُمْ وَمِنْ أَسْفَلَ مِنكُمْ وَإِذْ زَاغَتِ الْأَبْصَارُ وَبَلَغَتِ الْقُلُوبُ الْحَنَاجِرَ وَتَظُنُّونَ بِاللَّهِ الظُّنُونَا ﴿١٠﴾

(१०) जबकि (शत्रु) तिम्रा माथिबाट तथा तलबाट आइलागे[1] तथा जबकि आँखाहरु बाङ्गा-तेर्सा हुनथाले तथा हृदय कण्ठमा आउनलागे। तथा तिमी अल्लाहका सम्बन्धमा विभिन्न रुपमा विचार गर्न लाग्यौ।[2]

هُنَالِكَ ابْتُلِيَ الْمُؤْمِنُونَ وَزُلْزِلُوا زِلْزَالًا شَدِيدًا ﴿١١﴾

(११) यहीं ईमानवालाहरुको परीक्षा लिइयो तथा पूर्ण रुपमा हल्लाइए।[3]

وَإِذْ يَقُولُ الْمُنَافِقُونَ وَالَّذِينَ فِي قُلُوبِهِم مَّرَضٌ مَّا وَعَدَنَا اللَّهُ وَرَسُولُهُ إِلَّا غُرُورًا ﴿١٢﴾

(१२) तथा त्यस समय बहुमुखी (मिथ्याचारी) एवं रोगी हृदय भएका भन्नथाले कि अल्लाह (तआला) तथा त्यसका रसूलले हामीसित मात्र छल तथा कपटका नै वाचा गरेका थिए।

وَإِذْ قَالَت طَّائِفَةٌ مِّنْهُمْ يَا أَهْلَ

(१३) तथा उनैको एउटा गुटले आवाज दियो कि हे यस्रिबका मानिसहरु!।[4] तिम्रो

---

प्रथम جنود सित तात्पर्य काफ़िरहरुको सेना हो, जो एकत्रित भएर आएको थियो। तीब्र गतिको वायुसित तात्पर्य त्यो हावा हो जो तीब्र तूफानका रुपमा आएको थियो, जसले शत्रुहरुका खेमाहरु (टेन्टहरु) लाई उखेलेर फ्याँकेका थिए, जनावर डोरीहरु चूँडालेर भागेका थिए, हाँडीहरु (भाँडा) उलट-पलट भएका थिए तथा सबै भाग्नलाई बाध्य भए। यो त्यही हावा हो जसको विषयमा वर्णित छ। «نُصِرْتُ بِالصَّبَا، وَأُهْلِكَتْ عَادٌ بِالدَّبُورِ» (सहीह बुख़ारी किताबु इस्तिसका, मुस्लिम बाब फी रीहिस्सबा वददबूर) "मेरो सहायता सबा (पूर्वायी) बाट गरियो तथा 'आद' दबूर (पश्चिमी) हावाबाट नाश गरिए।" ﴿و جنوداً لم تروها﴾ बाट तात्पर्य फरिश्ताहरु हुन् जो मुसलमानहरुको सहायताका लागि आए। उनले शत्रुहरुका हृदयमा यस्ता भय तथा डर पारिदिए कि उनीहरुले त्यहाँबाट शीघ्र भागिहाल्नुमा नै आफ्नो सुरक्षा ठाने।

[1]यसबाट तात्पर्य यो हो कि प्रत्येक तिरबाट शत्रु आए अथवा माथिबाट तात्पर्य गत्फ़ान हवाज़िन तथा अन्य नजद्का मूर्तिपूजक हुन् र तलतिरबाट कुरैश तथा उनका साथी एवं सहयोगी।

[2]यो मुसलमानहरुको त्यस अवस्थाको वर्णन हो जसबाट उनीहरु त्यस समय पीडित थिए।

[3]अर्थात् मुसलमानहरुलाई भय, हत्या, भोक एवं नाकाबन्दीबाट पीडित गरी उनको परीक्षा लिइयो ताकि द्वयवादी अलग्ग होऊन।

[4]यथरिब त्यस सम्पूर्ण क्षेत्रको नाम थियो, मदीना उसैको एक भाग थियो जसलाई यहाँ यस्रिबको नाम दिइएको छ। भनिन्छ कि यसको नाम यस्रिब यसकारण पऱ्यो कि कुन

يَٰٓأَهۡلَ يَثۡرِبَ لَا مُقَامَ لَكُمۡ فَٱرۡجِعُواْۚ وَيَسۡتَـٔۡذِنُ فَرِيقٞ مِّنۡهُمُ ٱلنَّبِيَّ يَقُولُونَ إِنَّ بُيُوتَنَا عَوۡرَةٞ وَمَا هِيَ بِعَوۡرَةٍۖ إِن يُرِيدُونَ إِلَّا فِرَارٗا ﴿١٣﴾

बस्ने ठाउँ (यो होइन) फर्किजाउ ।[1] तथा उनको एउटा अन्य गुट यो आज्ञा नबीसित माँग्न थाल्यो कि हाम्रा घर खाली तथा असुरक्षित छन् ।[2] वास्तवमा ती (खुल्ला) असुरक्षित थिएनन्, (परन्तु) उनको दृढ निश्चय भागेर जाने भइसकेको थियो ।[3]

وَلَوۡ دُخِلَتۡ عَلَيۡهِم مِّنۡ أَقۡطَارِهَا ثُمَّ سُئِلُواْ ٱلۡفِتۡنَةَ لَأٓتَوۡهَا وَمَا تَلَبَّثُواْ بِهَآ إِلَّا يَسِيرٗا ﴿١٤﴾

(१४) तथा यदि मदीनाका चारैतिरबाट उनीमाथि (सेनाहरु) प्रवेश गराइन्थ्यो अनि उनीसित उपद्रवको माँग गरिन्थ्यो त यिनीहरु अवश्य उपद्रव मच्चाइदिन्थे र यसमा विलम्ब थोरै गर्दथे ।[4]

समय अमालिका मध्येबाट कसैले यहाँ पडाव, (खेमा) हालेको थियो जसको नाम यस्रिब बिन अमील थियो । (फतहुल क़दीर)

[1]अर्थात् मुसलमानहरुको सेनामा रहनु अत्याधिक भयावह छ, आ-आफ्ना घरहरुतिर फर्किहाल ।

[2]अर्थात् बनू कुरैज़ाको तर्फबाट आक्रमणको भय छ । त्यसप्रकार घरवालाहरुका प्रण एवं माल तथा सम्मानलाई खतरा छ ।

[3]अर्थात् जुन भय उनीहरु व्यक्त गरिराखेका छन्, त्यो होइन, बरु उनीहरु यसबाट भाग्ने मार्ग खोजिराखेका छन् । عَوۡرَةٌ का शाब्दिक अर्थका लागि हेर्नुस् सूर: नूरको आयत संख्या ५८ को व्याख्या ।

[4]अर्थात् मदीना अथवा उनका घरहरुमा चारैतिरबाट शत्रु पसून् तथा उनीसित माँग गरून् कि तिमी पुन: कुफ्र तथा शीर्क एवं मूर्तिपूजातिर फर्क, त यिनी अलिकति पनि ढिला गर्ने छैनन् तथा त्यस समय घरहरुलाई असुरक्षित हुनुको तर्क पनि प्रस्तुत गर्ने छैनन् बरु तुरुन्त मूर्तिपूजाको माँगतिर मोडिन्छन् । अभिप्राय यो हो कि कुफ्र तथा शीर्क उनलाई प्रिय छ तथा त्यसैतर्फ यिनीहरु लम्कन्छन् ।

وَلَقَدْ كَانُوا عَاهَدُوا اللَّهَ مِن قَبْلُ لَا يُوَلُّونَ الْأَدْبَارَ ۚ وَكَانَ عَهْدُ اللَّهِ مَسْئُولًا ﴿١٥﴾

(१५) तथा यसभन्दा पूर्व त उनीहरुले अल्लाहसित वाचा गरेका थिए कि पिठ्यूँ फर्काउने छैनन्[1] तथा अल्लाह (तआ़ला) सित गरिएका वाचाको सोधपूछ अवश्य छ ।[2]

قُل لَّن يَنفَعَكُمُ الْفِرَارُ إِن فَرَرْتُم مِّنَ الْمَوْتِ أَوِ الْقَتْلِ وَإِذًا لَّا تُمَتَّعُونَ إِلَّا قَلِيلًا ﴿١٦﴾

(१६) भनिदिनुस् कि यदि तिमी मृत्यु अथवा हत्याका भयले भाग्छौ भने यो भाग्नु तिमीलाई कुनै काम आउने छैन तथा त्यस समय तिमी अत्यन्त कम लाभान्वित गरिनेछौ ।[3]

قُلْ مَن ذَا الَّذِي يَعْصِمُكُم مِّنَ اللَّهِ إِنْ أَرَادَ بِكُمْ سُوءًا أَوْ أَرَادَ بِكُمْ رَحْمَةً ۚ وَلَا يَجِدُونَ لَهُم مِّن دُونِ اللَّهِ وَلِيًّا وَلَا نَصِيرًا ﴿١٧﴾

(१७) सोध्नुस् त कि यदि अल्लाह (तआ़ला) तिमीलाई कुनै नराम्रो कुरो पुऱ्याउन चाहन्छ अथवा तिमीमाथि कुनै कृपा गर्न चाहन्छ त को छ जसले तिमीलाई बचाउन सक्छ (अथवा तिमीबाट रोक्न सकोस्) ?[4] आफ्नो लागि अल्लाह (तआ़ला) का अतिरिक्त न कोही पक्षधर पाउनेछ न सहायता गर्ने ।

[1]भनिन्छ कि यी बहुमुखी (मुनाफ़िक) बद्रका युद्धसम्म मुसलमान भएका थिएनन् परन्तु जब मुसलमान विजयी भएर विजयी सामग्री लिएर मदीना फर्के त उनीहरुले न त केवल यो कि इस्लाम धर्म धारण गर्नुको प्रदर्शन गरे, बरु यो पनि वचन दिए कि यदि पुनः काफ़िरहरुसित युद्धको अवसर आयो भने उनीहरु मुसलमानका साथ मिलेर युद्ध अवश्य गर्नेछन्, यहाँ उनलाई त्यही वचन स्मरण गराइँदैछ ।

[2]अर्थात् त्यसलाई पूरा गर्नुको उनीबाट माँग गरिनेछ तथा वचन भङ्ग गर्नुको स्थितिमा दण्डका भागी हुनेछन् ।

[3]अर्थात् मृत्युबाट त कुनै परिस्थितिमा पनि भाग्न सक्दैन । यदि रणभूमिबाट भागेर पनि तिमी आउनेछौ, त के लाभ ? केही समय पश्चात मृत्युको स्वाद तिमी चाख्नेछौ ।

[4]अर्थात् तिमीलाई मार्नु, रोगी बनाउनु अथवा व्यवसायमा हानि पुऱ्याउनु अथवा अकालबाट पीडित गर्न चाहन्छ भने को छ जो तिमीलाई यसबाट बचाउन सक्छ ? अथवा आफ्नो दया एवं उपकार गर्न चाहन्छ भने त्यसले रोक्न सकोस् ?

قَدْ يَعْلَمُ اللّٰهُ الْمُعَوِّقِيْنَ مِنْكُمْ وَالْقَآئِلِيْنَ لِاِخْوَانِهِمْ هَلُمَّ اِلَيْنَا ۚ وَلَا يَاْتُوْنَ الْبَاْسَ اِلَّا قَلِيْلًا ﴿۱۸﴾

(१८) अल्लाह (तआ़ला) तिमी मध्येबाट (राम्ररी) जान्दछ जो अरुहरुलाई रोक्दछन् तथा आफ्ना भाइ बन्धुहरुसित भन्दछन् कि हाम्रो पासमा आईहाल ।[१] तथा कहिलेकाहीं मात्र लडाईमा आउँछन् ।[२]

اَشِحَّةً عَلَيْكُمْ ۚ فَاِذَا جَآءَ الْخَوْفُ رَاَيْتَهُمْ يَنْظُرُوْنَ اِلَيْكَ تَدُوْرُ اَعْيُنُهُمْ كَالَّذِيْ يُغْشٰى عَلَيْهِ مِنَ الْمَوْتِ ۚ فَاِذَا ذَهَبَ الْخَوْفُ سَلَقُوْكُمْ بِاَلْسِنَةٍ حِدَادٍ اَشِحَّةً عَلَى الْخَيْرِ ؕ اُولٰٓئِكَ لَمْ يُؤْمِنُوْا

(१९) तिम्रो सहायतामा (पूर्णरुपमा) कन्जुस छन्,[३] अनि जब डर, भयको अवसर आउँछ त तपाईंले देख्नुहुन्छ कि उनी तपाईंतिर दृष्टि केन्द्रित गर्छन् तथा उनका आँखा यसप्रकार घुम्छन्, जस्तै त्यस व्यक्तिको जसलाई मृत्युको वेहोशी हुन्छ ।[४] अनि जब भय जान्छ, त तिमीमाथि आफ्नो तेज जिब्रोले ठूलो कुरा गर्दछन् ।[५] मालका ठूला लोभी छन्,[६] यिनीहरुले

[१]यी भन्नेहरु मिथ्याचारी थिए, जो आफ्ना अन्य साथीहरुलाई पनि मुसलमानहरुसँग मिलेर युद्ध गर्नबाट रोक्दथे ।

[२]किनकि उनीहरु मृत्युका भयले पछाडी नै रहन्थे ।

[३]अर्थात् तिमीसँग खन्दक (खाई) खनेर तिमीलाई साथ दिनमा अथवा अल्लाहका मार्गमा खर्च गर्नमा अथवा तिमीसँग मिलेर युद्ध गर्नमा कंजूस छन् ।

[४]यो उनको कायरता तथा दुस्साहसको स्थितिको वर्णन हो ।

[५]अर्थात् आफ्नो वहादूरी एवं वीरताको विषयमा अहंकार व्यक्त गर्दछन्, जो सर्वथावाट झूठमा आधारित हुन्छ अथवा विजयमा प्राप्त सामानको विभाजनका समय आफ्नो वाकपटुताका कारण मानिसहरुलाई प्रभावित गरी धेरैभन्दा धेरै माल प्राप्त गर्ने प्रयत्न गर्दछन् । आदराणीय कतादहको कथन छ, "विजयमा प्राप्त सामग्रीका विभाजनका समय यिनी अत्याधिक कृपया एवं अत्याधिक नराम्रो भाग लिने तथा युद्धका समय सवभन्दा अधिक कायर तथा साथीहरुलाई निस्सहाय छाडेर भाग्नेहरु हुन् ।"

[६]अथवा दोस्रो अर्थ यो हो कि पुण्यको विचार पनि उनीहरुमा छैन । अर्थात् पूर्वोक्त दोष एवं त्रुटिहरुका साथ पुण्य एवं भलाईबाट पनि बञ्चित छन् ।

فَأَحْبَطَ اللَّهُ أَعْمَالَهُمْ ۚ وَكَانَ ذَٰلِكَ عَلَى اللَّهِ يَسِيرًا ⑲

ईमान स्वीकार्ने गरेका छैनन् ।[१] अल्लाह (तआ़ला) ले उनका सम्पूर्ण कर्मलाई अनर्थ गरिदिनुभएको छ।[२] तथा अल्लाह (तआ़ला) लाई यो अत्यन्त सरल छ ।[३]

يَحْسَبُونَ الْأَحْزَابَ لَمْ يَذْهَبُوا ۖ وَإِن يَأْتِ الْأَحْزَابُ يَوَدُّوا لَوْ أَنَّهُم بَادُونَ فِي الْأَعْرَابِ يَسْأَلُونَ عَنْ أَنبَائِكُمْ ۖ وَلَوْ كَانُوا فِيكُم مَّا قَاتَلُوا إِلَّا قَلِيلًا ⑳

(२०) ठान्दछन् कि अहिलेसम्म सेनाहरु गइसकेका छैनन् ।[४] तथा यदि सेनाहरु आउँछन् भने यिनी कामना गर्दछन् कि काश उनी वनवासीहरुमा बञ्जाराहरु (फिरन्ते) का साथ हुन्थे ताकि तिम्रा समाचार प्राप्त गरिरहन्थे,[५] यदि उनीहरु तिमीबीच उपस्थित भएपनि यसै कुरा राख्नका लागि तनिक (थोरै) लड्दथे ।[६]

[१]अर्थात् हृदयले वरु यिनी भ्रष्टाचारी हुन्, किनकि उनका हृदय कुफ्र एवं वैर भावले भरिएका छन् ।

[२]यसकारण कि उनीहरु मूर्तिपूजक एवं नास्तिक नै छन् तथा नास्तिक एवं मूर्तिपूजकका कर्म व्यर्थ छन्, जसको लागि कुनै प्रतिफल एवं पुण्य छैन । अथवा أحبط، أظهر को अर्थमा छ, अर्थात् उनका कर्महरुको व्यर्थतालाई व्यक्त गरिदियो, यसकारण कि उनका कर्म यस्तो छँदैछैनन् कि उनी पुण्यका योग्य होऊन् तथा अल्लाहले उनलाई अयोग्य गरिदेओस् । (फ़तहुल क़दीर)

[३]उनका कर्महरुलाई अनर्थ गरिदिनु अथवा उनको मिथ्यावाद ।

[४]अर्थात् यी मिथ्याचारीहरुको कायरता, साहसको कमी भय तथा आतङ्कको यो दशा छ कि काफ़िरहरुका गिरोह यद्यपि असफल भई फर्किसकेका छन्, यिनीहरु अहिले पनि ठान्दछन् कि उनी अहिलेसम्म मोर्चा तथा खेमाहरुमा उपस्थित छन् ।

[५]अर्थात् यदि मानी पनि हालियो कि यदि ती काफ़िरहरुका गिरोह पुनः युद्धका विचारले फर्केर आउँछ त भ्रष्टाचारीको इच्छा यही हुनेछ कि उनीहरु मदीना नगरमा आउनुका सट्टा, बाहिर मरुभूमिमा बद्दुहरुका साथ होऊन् तथा त्यहाँ मानिसहरुसित तिम्रो विषयमा सोधिरहून् कि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) तथा त्यसका साथी नाश भए अथवा भएनन् ? अथवा काफ़िरहरुको सेना सफल रहयो अथवा असफल ।

[६]मात्र अपमानका भयले अथवा स्वदेशीका पक्षका कारणले । यसमा ती मानिसहरुका लागि घोर चेतावनी छ, जो धर्मयुद्धबाट पिठ्यूँ फर्काउन्छन् अथवा त्यसबाट पछाडी हट्दै रहन्छन् ।

لَقَدْ كَانَ لَكُمْ فِي رَسُولِ اللَّهِ أُسْوَةٌ حَسَنَةٌ لِّمَن كَانَ يَرْجُوا اللَّهَ وَالْيَوْمَ الْآخِرَ وَذَكَرَ اللَّهَ كَثِيرًا ﴿٢١﴾

(२१) अवश्य तिम्रा लागि रसूलुल्लाहमा उत्तम आदर्श छ ।[1] प्रत्येक त्यस व्यक्तिका लागि जो अल्लाह (तआ़ला) को तथा केयामतका दिनमाथि आस्था राख्दछ तथा अल्लाहलाई अधिक स्मरण गर्दछ ।[2]

وَلَمَّا رَأَى الْمُؤْمِنُونَ الْأَحْزَابَ قَالُوا هَٰذَا مَا وَعَدَنَا اللَّهُ وَرَسُولُهُ وَصَدَقَ اللَّهُ وَرَسُولُهُ ۚ

(२२) तथा जब ईमानवालाहरुले (काफ़िरहरुका) सेनाहरुलाई देखे त (सहसा) भनिहाले कि यिनैको वचन हामीलाई अल्लाह तआ़लाले तथा त्यसका रसूलले दिएका थिए तथा अल्लाह (तआ़ला)

[1]अर्थात् हे मुसलमान एवं मुनाफिक़हरु ! तिमी सबैका लागि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लममा आदर्श छ, त तिमी धर्मयुद्धमा तथा धैर्य एवं संयममा त्यसको अनुसरण गर । हाम्रो सन्देष्टा धर्मयुद्धका समय भोको रहयो यहाँसम्मकि कष्टका बावजूद सहन गर्दैरहे, त्यसको मुख आहत भयो त्यसको दाँत भाँचियो, खन्दक आफ्नो हातले खन्यो तथा लगभग एक महिना शत्रुको साम्नु डटिरहयो । यो आयत यद्यपि अहज़ाबका युद्धको विषयमा अवतरित भएको छ, जसमा युद्धका अवसरमा विशेषरुपले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका व्यक्तिगत आचरणलाई समक्ष राख्नु तथा अनुकरण गर्नुको आदेश दिइएको छ । परन्तु यो आदेश सामान्य छ अर्थात् उहाँ सल्लल्लाहु अलैहि वसल्लमका समस्त कथनी, करणी एवं अवस्थामा मुसलमानहरुका लागि अनुकरण अनिवार्य छ चाहे त्यसको सम्बन्ध इबादतसित होस् अथवा सामाजिक, अर्थव्यवस्थासित अथवा राजनीतिसित, जीवनका प्रत्येक कोणमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको मार्गदर्शनको अनुकरण अनिवार्य छ । -----﴿وَمَا آتَاكُمُ الرَّسُولُ فَخُذُوهُ﴾ सूर: अल-हश्र) तथा ﴿إِن كُنتُمْ تُحِبُّونَ اللَّهَ﴾ (सूर: आले इमरान-३१) को अर्थ पनि यही छ ।

[2]यसबाट यो स्पष्ट भयो कि सन्देष्टाका आचरणको अनुकरण त्यसैले गर्नेछ जो आखिरतमा अल्लाहका मिलनमा विश्वास राख्दछ तथा अत्याधिक अल्लाहको वर्णन तथा स्मरण गर्दछ । आज मुसलमान पनि सामान्य रुपले यी दुबै गुणहरुबाट बञ्चित छन् । यसकारण रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका आचरणको पनि कुनै महत्व उनका हृदयमा छैन । उनीहरुमा जो धार्मिक मानिस छन् उनका नेता, मुखिया, गुरु तथा ज्ञानी छन् तथा जो सांसारिक मानिस तथा राजनीतिक व्यक्तिहरु छन् उनका गुरु तथा नेता पाश्चात्य देशका स्वामी छन् । रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित प्रेमका मौखिक दावी ठूला छन्, परन्तु उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई मुखिया तथा गुरु मान्नका लागि उनीहरुमध्ये कोही तयार छैन । فإلى الله المشتكى

وَمَا زَادَهُمْ إِلَّآ إِيمَٰنًا وَتَسْلِيمًا ﴿٢٢﴾

तथा त्यसका रसूल सत्य छन् ।[1] तथा त्यस (वस्तु) ले उनका ईमानमा तथा आज्ञापालनमा झन् बढोत्तरी गरिदिए ।[2]

مِّنَ ٱلْمُؤْمِنِينَ رِجَالٌ صَدَقُوا۟ مَا عَٰهَدُوا۟ ٱللَّهَ عَلَيْهِ ۖ فَمِنْهُم مَّن قَضَىٰ نَحْبَهُۥ وَمِنْهُم مَّن يَنتَظِرُ ۖ

(२३) ईमानवालाहरुमा (यस्ता) मानिस पनि छन् जसले जो प्रतिज्ञा अल्लाह (तआला) सित गरेका थिए, उनीहरुलाई साँचो गरेर देखायो[3] केहीले त आफ्ना वचन पूरा गरिदिए[4] तथा केही



[1]अर्थात् मिथ्याचारीहरुले त शत्रुहरुको अधिक संख्या तथा घोर परिस्थितिहरुलाई देखेर भनेका थिए कि अल्लाह र रसूलका वचन धोखा थिए, तिनका विपरीत ईमान भएकाहरुले भने कि अल्लाह तथा रसूलले जो वाचा गरेका छन् कि दुख एवं परीक्षाको घडीबाट गुज्रेर तिमीलाई विजय एवं सफलता प्रदान गरिनेछ, त्यो सत्य छ ।

[2]अर्थात परिस्थितिहरुको कठिनाई एवं भयानकताले उनका ईमानलाई विचलित गरेन, अपितु उनका ईमानमा तथा आज्ञाकारिता एवं स्वीकृति तथा प्रसन्नताको भावनालाई अझ बढाइदियो । यसमा यस कुरोको प्रमाण छ कि मानिस तथा त्यसका विभिन्न परिस्थितिहरुका आधारमा ईमान तथा त्यसको शक्तिमा कमी एवं वृद्धि हुन्छ, जस्तो कि मोहद्दसीन (हदीसका विशेषज्ञहरु) को मत छ ।

[3]यो आयत ती केही सहाबाका विषयमा अवतरित भएको छ, जसले यस अवसरमा आफ्ना प्राणहरुको आहुति दिनुका विचित्र एवं आश्चर्यजनक कर्तव्य देखाएका थिए तथा उनीहरुमै ती सहाबा पनि सम्मिलित थिए जो बद्रका रणमा सम्मिलित हुन सकेका थिएनन्, परन्तु उनीहरुले यो प्रतिज्ञा गरिसकेका थिए कि यदि अब पुन: कुनै अवसर आयो भने धर्मयुद्धमा भरपूर भाग लिनेछन्, जस्तै नज़र बिन अनस आदि जो अन्तमा लड्दै ओहदका युद्धमा शहीद भए । उनका शरीरमाथि तलवार, भाला तथा तीरहरुका अस्सीभन्दा बढी घाउ थिए, शहादतका पश्चात उनकी बहिनीले उनलाई उनको औंलाका टुप्पोबाट थाहा पाइन् (मुसनद अहमद भाग-४ पृष्ठ संख्या १९३)

[4] نَحْب को अर्थ वचन, भाकल (मन्नत) तथा मृत्युसित गरिएका छन् । अभिप्राय यो हो कि ती सत्यवादीहरुमध्ये केहीले आफ्नो वचन अथवा मन्नत पूरा गर्दै शहीद भए ।

وَمَا بَدَّلُوْا تَبْدِيْلًا ۝

(अवसरको) प्रतीक्षामा छन् तथा उनीहरुले कुनै परिवर्तन गरेनन् ।[1]

لِيَجْزِيَ اللّٰهُ الصّٰدِقِيْنَ بِصِدْقِهِمْ وَيُعَذِّبَ الْمُنٰفِقِيْنَ اِنْ شَآءَ اَوْ يَتُوْبَ عَلَيْهِمْ ؕ اِنَّ اللّٰهَ كَانَ غَفُوْرًا رَّحِيْمًا ۝

(२४) ताकि अल्लाह (तआ़ला) सच्चालाई उनको सत्यताको पुरस्कार देओस् तथा यदि चाहन्छ भने द्वयवादीहरुलाई दण्ड देओस् अथवा उनको पनि क्षमा-याचना स्वीकार गरोस्,[2] अल्लाह (तआ़ला) अत्यन्त क्षमाशील एवं अत्यन्त दयालु छ ।

وَرَدَّ اللّٰهُ الَّذِيْنَ كَفَرُوْا بِغَيْظِهِمْ لَمْ يَنَالُوْا خَيْرًا ؕ وَكَفَى اللّٰهُ الْمُؤْمِنِيْنَ الْقِتَالَ ؕ وَكَانَ اللّٰهُ قَوِيًّا عَزِيْزًا ۝

(२५) तथा अल्लाह (तआ़ला) ले काफ़िरहरुलाई उनको क्रोधको अवस्थामा नै (असफल) फर्काइदियो कि उनको कुनै कामना पूरा भएन ।[3] तथा त्यस युद्धमा अल्लाह (तआ़ला) स्वयं नै ईमानवालाहरुका लागि पर्याप्त भयो ।[4] अल्लाह (तआ़ला) अत्यन्त शक्तिशाली एवं प्रभावशाली छ ।

---

[1]तथा अन्य पनि छन् जो शहीद हुन सकेनन्, जबकि त्यसको चेष्टामा धर्मयुद्धमा भाषा लिन्छन् तथा शहादतको सौभाग्य गर्नुको कामना राख्दछन् ।

[2]अर्थात् उनीहरुलाई इस्लाम धर्म धारण गर्नुको सौभाग्य प्रदान गरोस् ।

[3]अर्थात् मूर्तिपूजक जो विभिन्न क्षेत्रबाट एकत्रित भएर आएका थिए ताकि मुसलमानहरुको अस्तित्व समाप्त गरिदेऊन् । अल्लाहले उनीहरुलाई तिनीहरुका क्रोध तथा नराम्रा विचारका साथ फिर्ता फर्काइदियो न त सांसारिक धन दौलत उनले हात पारे तथा न आख़िरतमा प्रतिफल अथवा पुण्य प्राप्त गर्नका अधिकारी हुनेछन् अथवा न पुण्य गर्नुका अधिकारी हुनेछन्, कुनै पनि प्रकारको पुण्य उनीहरुलाई प्राप्त हुनेछैन ।

[4]अर्थात् मुसलमानहरुलाई उनीसित लड्नुको आवश्यकता नै भएन, बरु अल्लाह तआ़लाले आफ्ना ईमान्दार भक्तहरुलाई वायु तथा फरिश्ताहरुद्वारा सहायता पुऱ्यायो । यसै कारण नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो «لَا إِلٰهَ إِلَّا اللهُ وَحْدَهُ، صَدَقَ وَعْدَهُ، وَنَصَرَ عَبْدَهُ، وَأَعَزَّ جُنْدَهُ وَهَزَمَ الأَحْزَابَ وَحْدَهُ، فَلَا شَيْءَ بَعْدَهُ» (सहीह बुख़ारी किताबुल उमरा) "एक अल्लाहका अतिरिक्त कोही पूजनीय छैन, उसले आफ्नो वचन सत्य गरेर देखायो, आफ्ना दासलाई सहायता गऱ्यो, आफ्नो सेनालाई सफल गऱ्यो तथा समस्त गिरोहहरुलाई एक्लै उसले पराजित गऱ्यो,

وَأَنْزَلَ الَّذِيْنَ ظَاهَرُوْهُمْ مِّنْ أَهْلِ الْكِتٰبِ مِنْ صَيَاصِيْهِمْ وَقَذَفَ فِيْ قُلُوْبِهِمُ الرُّعْبَ فَرِيْقًا تَقْتُلُوْنَ وَتَأْسِرُوْنَ فَرِيْقًا ﴿٢٦﴾

(२६) तथा जुन अहले किताबले उनीसँग गरेका थिए, उनीहरुलाई (पनि) अल्लाह तआलाले दुर्गहरुबाट निकालदियो तथा उनका हृदयमा (पनि) भय हालिदियो कि तिमी उनका एक गुटलाई हत गरिराखेका छौ तथा एक गुटलाई बन्दी बनाइराखेका छौ ।

وَأَوْرَثَكُمْ أَرْضَهُمْ وَدِيَارَهُمْ وَأَمْوَالَهُمْ وَأَرْضًا لَّمْ تَطَئُوْهَا ط

(२७) तथा उसले तिमीलाई उनको भूमिको तथा उनका घरहरु तथा धन-सम्पत्तिको स्वामी बनाइदियो[1] तथा त्यस भूमिको पनि जसमाथि

त्यसका पश्चात कोही अस्तित्व छैन ।" यो प्रार्थना हज्ज, उमरह, धर्मयुद्ध तथा यात्राबाट फर्केपछि पनि पढ्नुपर्छ ।

[1]यसमा बनी कुरैज़ाका युद्धको वर्णन छ । जस्तो कि पहिला व्यतीत भइसकेको छ कि उसले सन्धिलाई भङ्ग गरी अहज़ाबका युद्धका समय मूर्तिपूजकहरु तथा अन्य यहूदीहरुलाई सहयोग दिएको थियो । अत: अहजा़बका युद्धबाट फिर्ता गई रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम अहिले स्नान मात्रै गर्न पाउनु भएको थियो कि आदरणीय जिबरील आइहाले तथा भने कि तपाईं सल्लल्लाहु अलैहि वसल्लमले हथियार राखिदिनु भयो ? हामी फरिश्ताहरुले त राखेका छैनौं । हिंड्नुस् अब बनू कुरैजासँग युद्ध गर्नुछ । मलाई अल्लाहले यसैकारण तपाईं सल्लल्लाहु अलैहि वसल्लमको पासमा पठाएको छ । अत: उहाँले मुसलमानहरुमा घोषणा गराइदिनु भयो वरु उनलाई विशेषरुपले भनिदिनु भयो कि अस्रको नमाज़ त्यहीं गएर पढ्नुछ । यो आबादी मदीनाबाट केही मिलको दूरीमा थियो । यिनीहरु आफ्ना दूर्गहरुमा पसिहाले । बाहिरबाट मुसलमानहरुले घेराबन्दी गरे, जो लगभग पच्चीस दिनसम्म निरन्तर रहयो । अन्तमा उनीहरुले साद बिन मुआज़लाई आफ्नो मध्यस्थ बनाए कि उनले जुन निर्णय दिनेछन् हामीलाई स्वीकार हुनेछ । अत: उनले निर्णय दिए कि उनीहरुमध्ये लड्नेहरुको हत्या गरिदिइयोस् तथा केटाकेटी, वृद्ध तथा स्त्रीहरुलाई बन्दी बनाइयोस् तथा उनको धन मुसलमानहरुमा विभाजित गरियोस् । नबी सल्लल्लाहु अलैहि वसल्लमले यो निर्णय सुनेर भन्नुभयो कि यही निर्णय आकाशमा अल्लाह तआलाको छ । यसका अनुसार उनका लडाकूहरुलाई मारियो तथा मदीनालाई उनका अपवित्र अस्तित्वबाट प्रतिपकार दिइयो । (हेर्नुस् सहीह बुख़ारी बाब गज्वतिल खंदक) انزل दुर्गहरुबाट तल झरालियो, ظاهروهم काफ़िरहरुको उनीहरुले सहायता गरे ।

وَكَانَ اللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرًا ﴿٢٧﴾

तिम्रा पाइला नै पुगेका थिएनन् ।[1] अल्लाह (तआ़ला) सबैथोक गर्नसक्ने सामर्थ्य राख्दछ ।

يَا أَيُّهَا النَّبِيُّ قُل لِّأَزْوَاجِكَ إِن كُنتُنَّ تُرِدْنَ الْحَيَاةَ الدُّنْيَا وَزِينَتَهَا فَتَعَالَيْنَ أُمَتِّعْكُنَّ وَأُسَرِّحْكُنَّ سَرَاحًا جَمِيلًا ﴿٢٨﴾

(२८) हे नबी ! आफ्ना पत्नीहरुसित भनिदिनुस् कि यदि तिम्रो इच्छा सांसारिक जीवन तथा सांसारिक शोभाको छ भने त आउ म तिमीलाई केही दिलाइदेऊ तथा तिमीलाई राम्रो रीतिले बिदा गरिदेऊ ।

وَإِن كُنتُنَّ تُرِدْنَ اللَّهَ وَرَسُولَهُ وَالدَّارَ الْآخِرَةَ فَإِنَّ اللَّهَ أَعَدَّ لِلْمُحْسِنَاتِ مِنكُنَّ أَجْرًا عَظِيمًا ﴿٢٩﴾

(२९) तथा यदि तिम्रा इच्छा अल्लाह तथा त्यसका रसूल एवं आख़िरतको घर छ भने (विश्वास गर कि) तिमीमध्ये पुण्य कार्य गर्नेहरुका लागि अल्लाह (तआ़ला) ले अत्यन्त उत्तम प्रतिफल राखिछाडेको छ ।[2]

[1]केही विद्वानले यसबाट ख़ैबरको भूमिको अर्थ लिएका छन् किनकि त्यसका पश्चात नै हुदैबिया सन्धिका पश्चात मुसलमानहरुले ख़ैबरमाथि विजय प्राप्त गरेका छन् । केहीले भने कि मक्काको भूमि हो तथा केहीले फारस तथा रोमको भूमिलाई यसको अभिप्राय भनेका छन् तथा केहीले ती समस्त धर्तीलाई भने जो मुसलमान केयामतसम्म विजयद्वारा प्राप्त गर्नेछन् । (फ़तहुल क़दीर)

[2]विजय प्राप्त हुनुका परिणाम स्वरुप जब मुसलमानहरुको स्थिति पहिलाको अपेक्षा केही सुध्रिएको थियो त अंसार तथा मोहाज़िरहरुका महिलाहरुलाई देखेर पवित्र पत्नीहरुले पनि आफ्ना पोषण खर्चको बृद्धिको माँग गरे । किनभने नबी सल्लल्लाहु अलैहि वसल्लम सरलता प्रिय थिए, यसैले पवित्र पत्नीहरुको माँगमा अत्यन्त दुखी भए तथा पत्नीहरुबाट अलग रहनथाले, जो एक महिनासम्म निरन्तर रहयो । अन्तमा अल्लाह तआ़लाले यो आयत अवतरित गर्‍यो । यसका पश्चात उहाँले सर्वप्रथम आदरणीय आयशालाई यो आयत सुनाएर तिनलाई अधिकार दिनुभयो । तैपनि तिनलाई भन्नुभयो कि स्वयं निर्णय गर्नुका साटो आफ्नो माता-पितासित परामर्शका पश्चात नै कुनै निर्णय लिनु । आदरणीय आयशाले भन्नुभयो कि यो कसरी हुनसक्छ कि म तपाईंको विषयमा परामर्श गरुँ, बरु मैले अल्लाह तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई छाडेर सांसारिक सुख-सुविधालाई अधिमान (महत्व) दिइन । (सहीह बुख़ारी तफ़सीर सूर: अहज़ाब) त्यस समय उहाँ सल्लल्लाहु अलैहि वसल्लमका विवाहित सम्बन्धमा नौं पत्नीहरु थिए, पाँच कुरैशबाट थिए, आदरणीय आएशा, हफ़सा, उम्मे, हबीबा, सौदह एवं उम्मे सलमा तथा उनका अतिरिक्त अर्थात्

(३०) हे नबीका पत्नीहरु ! तिमीहरुमध्ये जसले पनि अश्लील कर्म गर्नेछ, त्यसलाई दुईगुना यातना दिइनेछ[1] अल्लाह तआ़लाका निकट यो अत्यन्त सरल कुरो छ ।

يٰنِسَآءَ النَّبِيِّ مَنْ يَّاْتِ مِنْكُنَّ بِفَاحِشَةٍ مُّبَيِّنَةٍ يُّضٰعَفْ لَهَا الْعَذَابُ ضِعْفَيْنِ ۗ وَكَانَ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرًا ۝

आदरणीय सफ़ीया, मैमूना, ज़ैनब तथा जुबैरिया थिए رضي الله عنهن स्पष्ट होस् कि उहाँ सल्लल्लाहु अलैहि वसल्लमकी पत्नीहरुको संख्या ११ थियो र २ जना युद्धबन्दी पनि थिए । तर उहाँको प्रथम विवाह २५ वर्षको युवाकालमा आदरणीय खदीजा (जो चाहिं विधवा ४० वर्षकी थिइन्) सित भएको थियो र जुन आदरणीय खदीजाको जीवनकालमा अन्य कसैसित मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमले विवाह गर्नुभएन । यसर्थ उहाँको बारेमा दानवको कुविचारमा लागेर गलत धारणा राख्नु महापाप हो । बरु उहाँ सल्लल्लाहु अलैहि व सल्लमको प्रत्येक विवाहमा कुनै न कुनै तत्वदर्शिता अवश्य थियो । विस्तृत जानकारीका लागि पढ्नुस् (अर्रहीकुल मख़्तूम पृष्ठ ७५७-७६८ सम्म) केही व्यक्तिहरु पुरुषतिरबाट अलग हुनलाई तलाक़ (विवाह विच्छेद) भन्दछन् । परन्तु यो कुरो उचित छैन । उचित कुरो यो छ कि अलग हुनुको अधिकार दिनुका पश्चात स्त्री अलगाव रुचाउँदैन भने तलाक़ हुनेछैन, जस्तो कि पवित्र पत्नीहरुले अलगावको साटो रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका विवाहका बन्धनमा रहनु नै रुचाए, तसर्थ अधिकार दिनलाई तलाक़ मानिएन । (सहीह बुख़ारी किताबुत तलाक़)

[1]कुर्आनमा الفاحشة (लाम अक्षरका साथ) लाई व्यभिचारका अर्थमा प्रयोग गरिएको छ परन्तु فاحشة (जातिवाचक संज्ञा) लाई नराम्रोको लागि । यहाँ यसको अर्थ दूराचार तथा असभ्य व्यवहारसित छ, किनकि नबी सल्लल्लाहु अलैहि वसल्लमका साथ दुराचार उनलाई दुख पुऱ्याउनु हो, जुन गर्नु कुफ्र हो । यसका अतिरिक्त पवित्र पत्नीहरु स्वयं पनि उच्च पदमा थिए । तथा सर्वोच्च पदमा आसीन मानिसहरुको साधारण त्रुटि पनि ठूला त्रुटिहरुमा गणित हुन्छ । यसकारण उनीहरुलाई दुईगुना यातनाका दण्डको चेतावनी दिइएको छ ।

وَمَن يَقْنُتْ مِنكُنَّ لِلَّهِ وَرَسُولِهِۦ وَتَعْمَلْ صَٰلِحًا نُّؤْتِهَآ أَجْرَهَا مَرَّتَيْنِ وَأَعْتَدْنَا لَهَا رِزْقًا كَرِيمًا ﴿٣١﴾

(३१) तथा तिमीहरुमध्ये जो कोही पनि अल्लाहको तथा त्यसको रसूलको आज्ञापालन गर्नेछ तथा सत्कर्म गर्नेछ हामीले त्यसलाई दुईगुना प्रतिफल दिनेछौं,[1] तथा त्यसका लागि हामीले अति उत्तम जीविका तयार गरेका छौं ।

يَٰنِسَآءَ ٱلنَّبِيِّ لَسْتُنَّ كَأَحَدٍ مِّنَ ٱلنِّسَآءِ ۚ إِنِ ٱتَّقَيْتُنَّ فَلَا تَخْضَعْنَ بِٱلْقَوْلِ فَيَطْمَعَ ٱلَّذِى فِى قَلْبِهِۦ مَرَضٌ وَقُلْنَ

(३२) हे नबीका पत्नीहरु ! तिमी साधारण स्त्रीहरुका समान होइनौ,[2] यदि तिमी संयम गर्छौ भने कोमल भावले कुरा नगर कि जसका हृदयमा रोग छ त्यसले कुनै कुविचार गरोस्,[3] परन्तु

[1]अर्थात् जुनप्रकार पापको दण्ड दुईगुना हुनेछ पुण्यको प्रतिफल पनि दुईगुना हुनेछ । जुनप्रकार नबी सल्लल्लाहु अलैहि वसल्लमलाई अल्लाह तआलाले भन्नुभयो:

﴿ إِذًا لَّأَذَقْنَٰكَ ضِعْفَ ٱلْحَيَوٰةِ وَضِعْفَ ٱلْمَمَاتِ ﴾

"अनि त हामी पनि तपाईलाई दुईगुना यातना संसारको चखाउँथ्यौं तथा दुई गुना नै मृत्युको ।" (सूर: बनी इस्राईल-७५)

[2]अर्थात् तिम्रो स्थिति एवं पद साधारण महिलाहरुको जस्तो छैन बरु अल्लाहले तिमीलाई रसूल सल्लल्लाहु अलैहि वसल्लमकि पत्नी हुनुको जो सौभाग्य प्रदान गरेको छ, त्यसकारण तिमीलाई विशेष स्थान प्राप्त छ तथा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको जस्तै तिमीलाई पनि मुसलमानहरुका लागि आदर्श बन्नु छ । अत: उनीहरुलाई उनका स्थान एवं पदसित सचेत गरेर उनीहरुलाई केही निर्देश दिइराखिएका छन् । त्यसबाट सम्बोधित यद्यपि पवित्र पत्नीहरु हुन्, जसलाई ईमानवालाहरुको माताहरु भनिएको छ परन्तु वाक्य शैलीका अनुसार स्पष्ट छ कि उद्देश्य समस्त मुसलमानहरुका महिलाहरुलाई सम्झाउनु तथा चेतावनी दिनु हो । यसकारण यो निर्देश सबै मुसलमान महिलाहरुका लागि हो ।

[3]अल्लाह तआलाले जुनप्रकार महिलाहरुका अस्तित्वमा पुरुषहरुका लागि काम आकर्षण राखेको छ । (जसको सुरक्षाका लागि विशेष निर्देश दिएका छन् ताकि महिला पुरुषका लागि भ्रष्टाचारको कारण नबनून्) त्यसैप्रकार अल्लाह तआलाले महिलाहरुको आवाजमा पनि प्राकृतिक रुपमा आकर्षण, सरलता एवं कोमलता राखेको छ, जो पुरुषलाई आफूतिर आकर्षित गर्दछ । यसकारण यस आवाजका लागि पनि यो निर्देश दिइयो कि पुरुषहरुसित कुरा गर्दाखेरि विशेषरुपले यस्तो भाषाशैलीको प्रयोग गर कि कोमलता एवं सरलताका स्थानमा केही कडाई एवं निरस्ता होस्, ताकि कोही नराम्रो हृदय कुराको शैलीबाट तिमीतिर आकर्षित नहोस् तथा त्यसको हृदयमा कुविचार उत्पन्न नहोस् ।

قَوْلًا مَّعْرُوفًا ﴿٣٢﴾

नियमानुसार कुरा गर ।[१]

وَقَرْنَ فِي بُيُوتِكُنَّ وَلَا تَبَرَّجْنَ تَبَرُّجَ الْجَاهِلِيَّةِ الْأُولَىٰ وَأَقِمْنَ الصَّلَاةَ وَآتِينَ الزَّكَاةَ وَأَطِعْنَ اللَّهَ وَرَسُولَهُ ۚ إِنَّمَا يُرِيدُ اللَّهُ لِيُذْهِبَ عَنكُمُ الرِّجْسَ أَهْلَ الْبَيْتِ وَيُطَهِّرَكُمْ تَطْهِيرًا ﴿٣٣﴾

(३३) तथा आफ्ना घरहरुमा स्थाई रुपमा रह,[२] तथा प्राचीन अज्ञानकालको जस्तै आफ्ना श्रृङ्गार (सौन्दर्य) को प्रर्दशन नगर,[३] तथा नमाज़ स्थापित गर्दैरह एवं ज़कात दिंदैगर तथा अल्लाह एवं त्यसका रसूलको आज्ञापालन गर[४] अल्लाह (तआला) यही चाहन्छ कि हे नबीका गृहणीहरु[५] तिमीहरुबाट त्यो प्रत्येक

[१]अर्थात् यो नीरसता केवल भाषाशैलीमा नै होस्, मुखबाट यस्तो शब्द ननिकाल जो सामान्य नियम तथा स्वभावका विपरीत होस् । यिनलाई إن اتقيتن भनेर संकेत गरिदियो कि यो कुरा तथा अन्य निर्देश जो अगाडी छन् संयमी महिलाहरुका लागि छन्, किनकि उनीहरुलाई नै यो चिन्ता हुन्छ कि उनको आख़िरत बर्वाद नहोस् । जसका हृदयमा अल्लाहको भय व्याप्त छ, उनीहरुलाई यी निर्देशहरुसित के छ सम्बन्ध तथा उनी कहिल्यै यी निर्देशहरुको चिन्ता गर्दछन् ?

[२]अर्थात् टिकेर रह तथा अनावश्यक घरबाट बाहिर ननिस्क । यसमा स्पष्ट गरिदियो कि स्त्रीको कार्यक्षेत्र राजनीति एवं शासन होइन, आर्थिक झमेला पनि होइन बरु घरभित्र रहेर गृहस्थीको कार्य पूरा गर्नु हो ।

[३]यसमा घरबाट बाहिर निस्कनुका शिष्टाचार भनिएको छ कि यदि बाहिर जानुको आवश्यकता छ भने श्रृङ्गार-पटार गरी अथवा यस्तो ढङ्गले जसमा तिम्रो श्रृङ्गार प्रकट भइराखेको छ, न निस्क जस्तै बेपर्दा भई जसबाट तिम्रो शिर, मुख, बाहु तथा छाती आदि मानिसहरुलाई दर्शनको आमन्त्रण देओस् । बरु सुगन्ध नलगाइ सारा वस्त्रमा पर्दाका साथ निस्क । تبرج बेपर्दा तथा सज-धजका प्रदर्शनलाई भन्दछन् । कुर्आनले स्पष्ट गरिदिएको छ कि यो تبرج अज्ञानता हो जो इस्लामभन्दा पूर्व थियो तथा भविष्यमा पनि जब कुनैबेला यसलाई धारण गरिनेछ, यो अज्ञानता नै हुनेछ, इस्लामसित यसको कुनै सम्बन्ध छैन, चाहे यसको नाम जतिसुकै आकर्षक एवं सुन्दर राखियोस् ।

[४]पछिल्ला निर्देश नराम्रो कुराबाट बच्नुको सन्दर्भमा थियो, यो निर्देश पुण्य धारण गर्नुसित सम्बन्धित छ ।

[५]अहले वैतसित तात्पर्य को हुन् ? यसको निर्धारणमा केही मतभेद छ । केही ज्ञाताहरुले पवित्र पत्नीहरु तात्पर्य लिएका छन्, जस्तो कि यहाँ कुर्आन करीमका शब्दहरुबाट स्पष्ट भइराखेको छ । कुर्आनले पवित्र पत्नीहरुलाई नै अहले बैत भनेको छ । अन्य स्थानमा पनि पत्नीलाई अहले बैत भनिएको छ, जस्तो सूर: हूद आयत संख्या ७३ मा । यसकारण पवित्र पत्नीहरु अहले बैत हुनु कुर्आनका

(प्रकारको) अशुद्धतालाई टाढा राखोस् तथा तिमीलाई अत्यन्त पवित्र गरिदेओस् ।

وَاذْكُرْنَ مَا يُتْلٰى فِيْ بُيُوْتِكُنَّ مِنْ اٰيٰتِ اللّٰهِ وَالْحِكْمَةِ ۭ اِنَّ اللّٰهَ كَانَ لَطِيْفًا خَبِيْرًا ۝

(३४) तथा तिम्रा घरहरुमा अल्लाह (तआला) का जो आयतहरु तथा रसूलका हदीसहरु पढिन्छन्, तिनलाई स्मरण गर्दैरह, निश्चय अल्लाह (तआला) सूक्ष्मदर्शी सूचित छ ।

اِنَّ الْمُسْلِمِيْنَ وَالْمُسْلِمٰتِ وَالْمُؤْمِنِيْنَ

(३५) नि:सन्देह मुसलमान पुरुष एवं मुसलमान महिलाहरु,[२] ईमान्दार पुरुष एवं ईमान्दार

शब्दहरुबाट स्पष्ट छ । केही मानिसहरु, केही कथनहरुका आधारमा अहले बैतको सम्बन्ध केवल आदरणीय अली, आदरणीय फातिमा तथा आदरणीय हसन एवं हुसैनलाई मान्दछन् तथा पवित्र पत्नीहरुलाई यसबाट अलग-अलग ठान्दछन् जबकि प्रथम मानिस यी चार सहचरहरुलाई यसबाट निष्काशित ठान्दछन् जबकि मध्यम मार्ग तथा सन्तुलित कुरो यो हो कि दुबै अहले बैत हुन् । पवित्र पत्नीहरु त पवित्र कुर्आनका यी शब्दहरुको कारण तथा ज्वाईं एवं सन्तान ती कथनहरुका आधारमा जो सहीह हदीसबाट सिद्ध छ, जसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले उनलाई आफ्नो च्यादरमा लिएर भन्नुभयो कि "हे अल्लाह ! यी मेरा अहले बैत हुन्," जसको अर्थ यो हुन्छ कि यिनी पनि मेरा अहले बैतमध्ये हुन् अथवा यो प्रार्थना कि हे अल्लाह ! तिनीहरुलाई पनि पवित्र पत्नीहरु जस्तै मेरा अहले बैतमा सम्मिलित गर । यसप्रकार सबै तर्क एवं प्रमाणहरुमा सामंजस्य हुनजान्छ । (अन्य जानकारीका लागि हेर्नुस् फतहुल कदीर शौकानी)

[१]अर्थात् यिनका अनुसार कर्म गर । हिक्म:सित तात्पर्य हदीस छन् । यस आयतबाट तर्क दिँदै ज्ञानीहरुले भनेका छन् कि हदीस पनि कुर्आनको जस्तै पुण्यका विचार ले पाठ गर्न सकिन्छ । यसका अतिरिक्त यो आयत पवित्र पत्नीहरुलाई अहले बैत हुनुलाई प्रमाणित गर्दछ, यसकारण कि प्रकाशनाको अवतरण जसको चर्चा यस आयतमा छ पवित्र पत्नीहरुका घरहरुमा नै हुन्थ्यो, विशेष रुपमा आदरणीय आयशाका घरमा, जस्तो कि हदीसमा छ ।

[२]आदरणीय उम्मे सलमा तथा केही अन्य सहाबियात (अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लमका ईमानका साथ दर्शन गर्ने ती महिलाहरु जसका निधन पनि ईमानको अवस्थामा भयो) ले भने कि के कुरो छ कि अल्लाह तआला प्रत्येक स्थानमा पुरुषहरुलाई नै सम्बोधित गर्दछ, महिलाहरुलाई होइन । यसपछि यो आयत अवतरित भयो । (मुसनद अहमद ६/३०१) तिर्मिजी संख्या ३२११) यसमा महिलाहरुलाई सान्त्वनाको प्रबन्ध गरिएको छ, अन्यथा समस्त आदेशहरुमा पुरुषहरुका साथ महिलाहरु पनि सम्मिलित छन् ती विशेष आदेशहरु बाहेक जो केवल महिलाहरुका लागि छन् । यस आयतबाट तथा अन्य आयतहरुबाट

وَالْمُؤْمِنٰتِ وَالْقٰنِتِيْنَ وَالْقٰنِتٰتِ وَالصّٰدِقِيْنَ وَالصّٰدِقٰتِ وَالصّٰبِرِيْنَ وَالصّٰبِرٰتِ وَالْخٰشِعِيْنَ وَالْخٰشِعٰتِ وَالْمُتَصَدِّقِيْنَ وَالْمُتَصَدِّقٰتِ وَالصَّآئِمِيْنَ وَالصّٰٓئِمٰتِ وَالْحٰفِظِيْنَ فُرُوْجَهُمْ وَالْحٰفِظٰتِ وَالذّٰكِرِيْنَ اللّٰهَ كَثِيْرًا وَّالذّٰكِرٰتِ اَعَدَّ اللّٰهُ لَهُمْ مَّغْفِرَةً وَّاَجْرًا عَظِيْمًا ﴿٣٥﴾

महिलाहरु, आज्ञापालन गर्ने पुरुष एवं आज्ञा पालन गर्ने महिलाहरु, सत्यवादी पुरुष एवं सत्यवादी महिलाहरु, धैर्य भएका पुरुष एवं धैर्य राख्ने महिलाहरु, विन्ती गर्ने पुरुष एवं विन्ती गर्ने महिलाहरु, दान गर्ने पुरुष एवं दान गर्ने महिलाहरु, ब्रत (रोज़ा) बस्ने पुरुष एवं ब्रत (रोज़ा) बस्ने महिलाहरु, आफ्ना इन्द्रियहरुको रक्षा गर्ने पुरुष एवं आफ्ना इन्द्रियहरुको पुरुषहरुको रक्षा गर्ने महिलाहरु तथा अत्याधिक अल्लाहको स्मरण गर्ने (पुरुष) तथा स्मरण गर्ने (स्त्रीहरु) यी सबैका लागि अल्लाह (तआला) ले विस्तृत मोक्ष एवं महान (पुण्य) तयार गरिराखेको छ ।

وَمَا كَانَ لِمُؤْمِنٍ وَّلَا مُؤْمِنَةٍ اِذَا قَضَى اللّٰهُ وَرَسُوْلُهٗٓ اَمْرًا اَنْ يَّكُوْنَ لَهُمُ الْخِيَرَةُ مِنْ اَمْرِهِمْ ۗ

(३६) तथा (हेर) कुनै मुसलमान पुरुष तथा महिलालाई अल्लाह तथा त्यसका रसूलका निर्णय पश्चात आफ्नो कुनै कुराको कुनै अधिकार शेष रहँदैन ।[1] (याद राख !)

स्पष्ट छ कि इबादत एवं अल्लाहको आज्ञापालन तथा आख़िरतको पद एवं प्रतिष्ठामा पुरुष एवं स्त्रीका मध्ये कुनै अन्तर छैन । दुबैका लागि समानरुपले यो मैदान खुल्ला छ तथा दुबै समानरुपले पुण्य एवं प्रतिफल कमाउन सक्छ । लिङ्गको आधारमा उनीहरुमा कमी अथवा अधिकता गरिने छैन । यसका अतिरिक्त मुसलमान तथा ईमान भएकाहरुको अलग-अलग वर्णनबाट यो स्पष्ट भइसकेछ कि यी दुवैमा अन्तर छ । ईमानको श्रेणी इस्लामभन्दा उच्च छ, जस्तो कि कुर्आन तथा हदीसका अन्य प्रमाण पनि यसको पुष्टि गर्दछन् ।

[1]यो आयत आदरणीय ज़ैनबको विवाहको विषयमा अवतरित भएको थियो । आदरणीय ज़ैद बिन हारिसा मूल रुपमा अरब थिए, परन्तु कसैले उनलाई बाल्यवस्थामा नै समाति दास बनाएर बेचिदिएको थियो । नबी सल्लल्लाहु अलैहि वसल्लमसित आदरणीय ख़दीजाको विवाह पश्चात आदरणीय ख़दीजाले उनलाई रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमलाई उपहार स्वरुप भेट गर्नु भएको थियो । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले उनलाई स्वाधीन गरी आफ्नो पुत्र बनाउनु भएको थियो । नबी सल्लल्लाहु अलैहि वसल्लमले उनको विवाहको

وَمَنۡ يَعۡصِ ٱللَّهَ وَرَسُولَهُۥ فَقَدۡ ضَلَّ ضَلَٰلٗا مُّبِينٗا ۝٣٦

अल्लाह (तआ़ला) तथा त्यसका रसूलको जसले पनि अवज्ञा गर्नेछ, त्यो खुल्ला पथभ्रष्टतामा पर्नेछ ।

وَإِذۡ تَقُولُ لِلَّذِيٓ أَنۡعَمَ ٱللَّهُ عَلَيۡهِ وَأَنۡعَمۡتَ عَلَيۡهِ أَمۡسِكۡ عَلَيۡكَ زَوۡجَكَ وَٱتَّقِ ٱللَّهَ وَتُخۡفِي فِي نَفۡسِكَ مَا ٱللَّهُ مُبۡدِيهِ وَتَخۡشَى ٱلنَّاسَ وَٱللَّهُ أَحَقُّ أَن تَخۡشَىٰهُۖ فَلَمَّا قَضَىٰ زَيۡدٞ مِّنۡهَا وَطَرٗا زَوَّجۡنَٰكَهَا لِكَيۡ لَا يَكُونَ

(३७) (तथा याद गर) जबकि तिमी त्यस व्यक्तिसित भनिराखेका थियौ जसमाथि अल्लाहले पनि उपकार गऱ्यो तथा तिमीले पनि कि तिमी आफ्नी पत्नीलाई आफ्नो पासमा राख तथा अल्लाहसित तर्स, तथा तिनी आफ्नो हृदयमा त्यो कुरो लुकाएका थियौ जसलाई अल्लाह प्रकट गर्नेवाला थियो तथा तिमी मानिसहरुसित भय गर्दथ्यौ जबकि अल्लाह (तआ़ला) यसको अधिक अधिकारी थियो कि तिमी त्यससित तर्स,[1] तथा जबकि ज़ैदले त्यस

प्रस्ताव आफ्नी फूफीकी पुत्री आदरणीय ज़ैनबका साथ राख्नु भएको थियो, जसमाथि तिनलाई तथा तिनका भाइलाई आफ्ना पारिवारिक सम्मानका आधारमा संकोच भयो कि ज़ैद एउटा स्वतन्त्र गरिएका दास हुन् तथा तिनको सम्बन्ध एउटा उच्च सम्मानित परिवारसित छ । यस पश्चात यो आयत अवतरित भयो जसको अर्थ यो हो कि अल्लाह तथा रसूल सल्लल्लाहु अलैहि वसल्लमका निर्णयका पश्चात कुनै ईमान भएका पुरुष एवं स्त्रीलाई यो अधिकार छैन कि त्यसले आफ्ना अधिकारलाई प्रयोग गरोस् बरु त्यसका लागि यो छ कि त्यसले आफ्नो स्वीकृति दिइहालोस् । अतः यस आयतलाई सुन्नुको पश्चात आदरणीय ज़ैनब आदिले आफ्ना विचारहरुबारे हठ गरेनन् तथा उनको विवाह सम्पन्न भयो ।

[1]परन्तु उनको स्वभावमा अन्तर थियो, पत्नीको स्वभावमा पारिवारिक मान एवं सम्मान बसेको थियो जबकि ज़ैद (रज़ि अल्लाहु अन्ह) मा दासताको दाग थियो, उनीहरुको आपसमा मनमुटाव रहन्थ्यो जसको चर्चा आदरणीय ज़ैद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित गर्दैरहन्थे तथा तलाक़को संकेत पनि दिँदै रहन्थे । परन्तु नबी सल्लल्लाहु अलैहि वसल्लमले उनलाई तलाक़ दिनुबाट रोक्नु हुन्थ्यो तथा निर्वाह गर्नका लागि भन्नुहुन्थ्यो । यसका अतिरिक्त अल्लाहले उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) लाई यो सचेत पनि गरिदिएको थियो कि ज़ैदको तर्फबाट तलाक़ भएर नै रहन्छ, त्यसका पश्चात ज़ैनबको विवाह तपाईंसँग गरिदिइने छ ताकि अज्ञानकालको त्यस रीतिको खण्डन गरिदिइने छ कि मुखले भनेको पुत्र, धार्मिक विधानमा वास्तविक पुत्रको समान हुँदैन तथा त्यसद्वारा तलाक दिइएको महिलासित विवाह मान्य छ । आयतमा यिनै कुरातिर संकेत छ । आदरणीय ज़ैदमाथि अल्लाहको यो उपकार थियो कि त्यसले इस्लाम धर्मधारण गर्नुको सौभाग्य दियो तथा दासताबाट मुक्ति दिलायो । नबी सल्लल्लाहु अलैहि वसल्लमको उपकार उनीमाथि यो थियो कि

عَلَى الْمُؤْمِنِينَ حَرَجٌ فِي أَزْوَاجِ أَدْعِيَائِهِمْ إِذَا قَضَوْا مِنْهُنَّ وَطَرًا ۚ وَكَانَ أَمْرُ اللَّهِ مَفْعُولًا ﴿٣٧﴾

स्त्रीबाट आफ्नो आवश्यकता पूरा गरिहाल्यो ।[1] हामीले तिनलाई तिम्रो विवाहमा दियौं[2] ताकि मुसलमानहरुलाई आफ्ना लेपालकहरुका पत्नीहरुका विषयमा कुनै प्रकारको संकोच नरहोस्, जबकि उनी आफ्नो आवश्यकता त्यसबाट पूरा गरिहालून्[3] अल्लाहको (यो) आदेश भएर नै रहने थियो ।[4]

مَا كَانَ عَلَى النَّبِيِّ مِنْ حَرَجٍ فِيمَا فَرَضَ اللَّهُ لَهُ ۖ سُنَّةَ اللَّهِ

(३८) जुन वस्तुहरु अल्लाह (तआ़ला) ले आफ्नो नबीका लागि उचित (मान्य) गरेको छ, त्यसमा नबीलाई कुनै आपत्ति छैन ।[5] (यही) अल्लाह

उनलाई धार्मिक शिक्षा दिनु हो, उनलाई स्वतन्त्र गरेर आफ्नो पुत्र बनाउनु भएको थियो तथा आफ्नी फूफी उमैमा: बिन्त अब्दुल मुत्तलिब कि पुत्रीसित उनको विवाह गराइदिनु भयो । हृदयमा लुकाउने कुरो यही थियो जो उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई आदरणीया ज़ैनबसित विवाहका विषयमा प्रकाशनाद्वारा भनिएको थियो । उहाँ सल्लल्लाहु अलैहि वसल्लम यस कुरासित तर्सनु हुन्थ्यो कि मानिसहरु भन्नेछन् कि आफ्नी बुहारीसित विवाह गर्नु हो । जबकि अल्लाहलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमद्वारा यस रीतिलाई समाप्त गर्नु थियो तसर्थ मानिसहरुसित तर्सनुको आवश्यकता थिएन । उहाँ सल्लल्लाहु अलैहि वसल्लमको यो भय यद्यपि स्वभाविक थियो जो उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई सचेत गरेको थियो । प्रकट गर्नुबाट यही तात्पर्य छ कि यो विवाह हुनेछ जसबाट यो कुरो सबैका ज्ञानमा आउनेछ ।

[1]अर्थात् विवाहको पश्चात तलाक़ दिए तथा आदरणीय ज़ैनबले इद्दतका दिन पूरा गर्नुभयो ।

[2]यो विवाह प्रचलनका विरुद्ध केवल अल्लाहका आदेशले सम्पन्न भयो, विवाह मन्त्रका पाठ, अभिभावक, वकील साक्षी तथा महर बिना नै ।

[3]यो आदरणीय ज़ैनबसित नबी सल्लल्लाहु अलैहि वसल्लमको विवाहको कारण हो कि भविष्यमा कुनै मुसलमान यस विषयमा संकोचको आभाष नगरोस् तथा आवश्यकता अनुसार गोद लिएको पुत्र (दत्तक पुत्र) कि तलाक़ दिसकिएकी पत्नीसित विवाह गर्न सकियोस् ।

[4]अर्थात् पहिलादेखि नै अल्लाहका ज्ञानमा जो थियो त्यो प्रत्येक दशामा पूरा हुनु थियो।

[5]यो त्यही ज़ैनबको विवाहको घटनातिर संकेत छ, किनकि यो विवाह उहाँ सल्लल्लाहु अलैहि वसल्लमको लागि उचित (वैध) थियो । यसकारण यसमा कुनै पाप तथा संकीर्णताको कुरो छैन ।

فِي الَّذِينَ خَلَوْا مِن قَبْلُ ۚ وَكَانَ أَمْرُ اللَّهِ قَدَرًا مَّقْدُورًا ﴿٣٨﴾

को नियम उनीहरुमा पनि रहयो जो पहिला थिए[1] तथा अल्लाह (तआ़ला) का कार्य अटल निर्धारित गरिएका छन् ।[2]

الَّذِينَ يُبَلِّغُونَ رِسَالَاتِ اللَّهِ وَيَخْشَوْنَهُ وَلَا يَخْشَوْنَ أَحَدًا إِلَّا اللَّهَ ۗ وَكَفَىٰ بِاللَّهِ حَسِيبًا ﴿٣٩﴾

(३९) यी सबै यस्ता थिए कि अल्लाह (तआ़ला) का आदेश पुऱ्याउने गर्दथे एवं अल्लाहसित नै तर्सन्थे तथा अल्लाहका अतिरिक्त कोहीसित पनि तर्सन्नथे,[3] तथा अल्लाह (तआ़ला) हिसाब लिनका लागि पर्याप्त छ ।[4]

مَّا كَانَ مُحَمَّدٌ أَبَا أَحَدٍ مِّن رِّجَالِكُمْ وَلَٰكِن رَّسُولَ اللَّهِ وَخَاتَمَ النَّبِيِّينَ

(४०) (मानिसहरु), तिम्रा पुरुषहरुमध्ये कसैका पिता मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम होइन,[5] परन्तु उहाँ अल्लाह (तआ़ला) का रसूल

[1]अर्थात् विगत अम्बिया पनि यसप्रकारको कार्य गर्न कुनै संकोच गर्दैनथे, जो अल्लाहको तर्फबाट उनलाई अनिवार्य गरिन्थ्यो, चाहे सामुदायिक तथा सामाजिक रीति-रिवाज उनका विपरीत नै हुन्थे ।

[2]अर्थात् विशेष कारण एवं सुनीतिमा आधारित हुन्छन्, सांसारिक शासकहरुको जस्तो सामयिक एवं क्षणिक आवश्यकतामा आधारित हुँदैन । यसैप्रकार उनको समय पनि निर्धारित हुन्छ, जसका अनुसार घटित हुन्छन् ।

[3]यसकारण न कुनै भय अथवा प्रभाव उनलाई अल्लाहको सन्देश पुऱ्याउनमा रुकावट बन्थ्यो न अपमान एवं धिक्कारको उनलाई चिन्ता हुन्थ्यो ।

[4]अर्थात् प्रत्येक स्थानमा त्यो आफ्ना ज्ञान एवं शक्तिका अनुसार व्याप्त छ, यसकारण त्यो आफ्ना भक्तहरुको सहायताका लागि पर्याप्त छ तथा अल्लाहको धर्मको प्रचार-प्रसारमा उनलाई जो कठिनाईहरु छन्, त्यसमा त्यसले उनको सहायता गर्दछ तथा शत्रुहरुका नराम्रा उद्देश्य तथा षड्यन्त्रहरुबाट उनीहरुलाई बचाउँछ ।

[5]यसकारण उहाँ ज़ैद बिन हारिसाको पनि पिता हुनुहुन्न, जसका लागि उहाँलाई निन्दाको लक्ष्य बनाउन सकियोस् कि उहाँले आफ्नी बुहारीसित विवाह किन गर्नुभो ? बरु एक ज़ैद मात्रै होइन, उहाँ कुनै पनि पुरुषको पिता हुनुहुन्न, किनकि ज़ैद त हारिसाका पुत्र थिए । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले त उनलाई मुखले भनेर पुत्र बनाउनु भएको थियो तथा अज्ञानी नियमहरुका अनुसार उनलाई ज़ैद बिन मोहम्मद भनिन्थ्यो । वास्तवमा उनी उहाँ सल्लल्लाहु अलैहि वसल्लमका साखै पुत्र थिएन । यसैकारण ﴿ادْعُوهُمْ لِآبَائِهِمْ﴾ अवतरित हुनुका पश्चात उनलाई ज़ैद पुत्र

وَكَانَ اللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمًا ۝

हुनुहुन्छ तथा समस्त नबीहरुमा अन्तिम हुनुहुन्छ,[१] तथा अल्लाह (तआला) प्रत्येक वस्तुलाई राम्ररी जान्दछ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اذْكُرُوا اللّٰهَ ذِكْرًا كَثِيْرًا ۝

(४१) हे मुसलमानहरु ! अल्लाह तआलाको स्मरण अत्याधिक गर ।

وَّسَبِّحُوْهُ بُكْرَةً وَّاَصِيْلًا ۝

(४२) तथा बिहान-बेलुका त्यसको पवित्रताको वर्णन गर ।

هُوَ الَّذِيْ يُصَلِّيْ عَلَيْكُمْ وَمَلٰٓئِكَتُهٗ لِيُخْرِجَكُمْ مِّنَ الظُّلُمٰتِ اِلَى النُّوْرِ ۗ وَكَانَ بِالْمُؤْمِنِيْنَ رَحِيْمًا ۝

(४३) त्यही हो जसले तिमीमाथि आफ्नो दया पठाउँछ तथा त्यसका फरिश्ताहरु (तिम्रा लागि दयाको प्रार्थना गर्दछन्) ताकि त्यो तिमीलाई अन्धकारबाट प्रकाशतिर लगोस् । तथा अल्लाह (तआला) मुसलमानहरुमाथि अत्यन्त दयालु छ ।

تَحِيَّتُهُمْ يَوْمَ يَلْقَوْنَهٗ سَلٰمٌ ۚ

(४४) जुन दिन यिनी अल्लाह (तआला) सित भेट्नेछन् तिनको स्वागत सलामबाट हुनेछ,[२] उनका

हारिसा नै भनिन्थ्यो । यसका अतिरिक्त आदरणीया ख़दीजा (رضي الله عنها) बाट नबीँ सल्लल्लाहु अलैहि वसल्लमका पुत्र मात्र दुइवटा थिए । कासिम र अब्दुल्लाह, अनि अब्दुल्लाहको उपाधि तैयब र ताहिर थियो । यसर्थ तैयब र ताहिर उहाँका अन्य कुनै पुत्रको नाम होइन । (विस्तृत जानकारीका लागि पढ्नुहोस् : अर्रहीकुल् मख़्तूम/ पृष्ठ :१११ तेस्रो संस्करण १९८८ ऊर्दू) इब्राहीम मारीया क़िब्तियाको गर्भबाट भयो । परन्तु यी सबै बाल्यवस्थामा नै मरे, उनीमध्ये कुनै पनि पूर्ण वयस्क आयुसम्म पुगेन । यस आधारमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको आफ्नो सन्तानमा कोही पनि पुरुष रहेन जसका उहाँ सल्लल्लाहु अलैहि वसल्लम पिता होऊन् । (इब्ने कसीर)

[१] خَاتَمٌ अरबी भाषामा मोहर (मुद्रा) लाई भन्दछन् तथा मोहर अन्तिम क्रियालाई भनिन्छ । उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि नबूअत एवं रिसालतको अन्त्य भयो । उहाँ सल्लल्लाहु अलैहि वसल्लमका पश्चात जो पनि नबूअत अथवा रिसालतको दावी गर्नेछ, त्यो झूठा तथा दज्जाल हुनेछ । हदीसहरुमा यस विषयलाई विस्तृत रुपमा वर्णन गरिएको छ तथा यसमा सम्पूर्ण सम्प्रदाय सहमत छन् । कयामतका निकट आदरणीय ईसा धर्तीमा आउनेछन् जो सहीह तथा निरन्तर कथनबाट सिद्ध छ । उनी नबीका रुपमा आउने छैनन् बरु नबी सल्लल्लाहु अलैहि वसल्लमका अनुयायी बनेर आउनेछन् । यसकारण उनको धर्तीमा आगमन नबूअतको अन्तको विरुद्ध छैन ।

[२] अर्थात् स्वर्गमा फरिश्ताहरु ईमान भएकाहरुलाई अथवा ईमान भएका एक-अर्कालाई सलाम गर्नेछ ।

وَاَعَدَّ لَهُمْ اَجْرًا كَرِيْمًا ۝٤٤

लागि अल्लाह (तआला) ले सम्मानित पुरस्कार तयार गरिराखेको छ।

يٰٓاَيُّهَا النَّبِيُّ اِنَّآ اَرْسَلْنٰكَ شَاهِدًا وَّمُبَشِّرًا وَّنَذِيْرًا ۝٤٥

(४५) हे नबी ! वास्तवमा हामीले नै तपाईंलाई (रसूल) साक्षी, शुभसूचक तथा सचेतक बनाएर पठाएका छौं।[1]

وَّدَاعِيًا اِلَى اللّٰهِ بِاِذْنِهٖ وَسِرَاجًا مُّنِيْرًا ۝٤٦

(४६) तथा अल्लाहको आदेशबाट उसतिर आमन्त्रण गर्ने तथा प्रकाशमान दीप।[2]

وَبَشِّرِ الْمُؤْمِنِيْنَ بِاَنَّ لَهُمْ مِّنَ اللّٰهِ فَضْلًا كَبِيْرًا ۝٤٧

(४७) तथा तपाईं ईमानवालाहरुलाई शुभसूचना सुनाइदिनुस् कि उनका लागि अल्लाह (तआला) को तर्फबाट निकै ठूलो अनुग्रह छ।

وَلَا تُطِعِ الْكٰفِرِيْنَ وَالْمُنٰفِقِيْنَ وَدَعْ اَذٰىهُمْ وَتَوَكَّلْ عَلَى اللّٰهِ ۗ وَكَفٰى بِاللّٰهِ وَكِيْلًا ۝٤٨

(४८) तथा काफ़िर एवं मुनाफ़िकहरुको भनाई नमान्नुस् ! तथा जुन दुख (उनीहरुतिरबाट) पुग्दछ त्यसको चिन्ता नगर्नुस्, अल्लाहमाथि भरोसा राख्नुस्, अल्लाह काम बनाउनका लागि पर्याप्त छ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا

(४९) हे मुसलमानहरु ! जब तिमी मुसलान महिलाहरुसित विवाह गर्दछौ अनि उनीहरुलाई हात लगाउनु

[1]केही ज्ञाताहरु شَاهِد (शाहिद) को अर्थ साक्षात विद्यमान गर्दछन् जो कुर्आनको अर्थमा परिवर्तन छ। नबी सल्लल्लाहु अलैहि वसल्लम आफ्ना समुदायको साक्ष्य दिनुहुनेछ, उनीहरुको पनि जो तपाईंमाथि ईमान स्वीकार गरे तथा उनको पनि जो तपाईंलाई झुठ्लाउँदै रहे। उहाँ सल्लल्लाहु अलैहि वसल्लम ईमान भएकाहरुलाई उनका वजूका अङ्गहरुबाट चिनिहाल्नु हुनेछ जो टल्किराखेका हुनेछन्। यसैप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लम अन्य नबीहरु (सन्देष्टाहरु) को साक्षी बन्नुहुनेछ कि उनीहरुले आ-आफ्ना समुदायलाई प्रदान गरिएका निश्चित ज्ञानको आधारमा हुनेछ यसकारण होइन कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम समस्त सन्देष्टाहरुलाई आफ्नो दृष्टिले हेर्दै आइराख्नु भएको छ। यो विश्वास त कुर्आनका सुत्रहरुको विरुद्ध छ।

[2]जुनप्रकार द्वीपबाट अन्धकार दूर हुन्छ, त्यसैप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लमद्वारा कुफ्र तथा शिर्क (मूर्तिपूजा) का अन्धकार हटे। यसका अतिरिक्त यस दिव्य द्वीपबाट प्रकाश प्राप्त गरी जो सम्मान तथा आदर प्राप्त गर्न चाहन्छ गर्नसक्छ, यसकारण कि जो दीप केयामतसम्म प्रकाशित छ।

إِذَا نَكَحْتُمُ الْمُؤْمِنَٰتِ ثُمَّ طَلَّقْتُمُوهُنَّ مِن قَبْلِ أَن تَمَسُّوهُنَّ فَمَا لَكُمْ عَلَيْهِنَّ مِنْ عِدَّةٍ تَعْتَدُّونَهَا فَمَتِّعُوهُنَّ وَسَرِّحُوهُنَّ سَرَاحًا جَمِيلًا ﴿٤٩﴾

भन्दा पूर्व तलाक् दिन्छौ भने तिनीहरुमाथि तिम्रो कुनै (अधिकार) इद्दत (तलाक्का पश्चात निर्धारित समयसम्मको प्रतिबन्धित अवधि) को छैन जसको तिमी गणना गर ।[1] तसर्थ तिमी उनीहरुलाई केही न केही दिइहाल ।[2] तथा राम्ररी उनीहरुलाई बिदा गरिदेऊ ।[3]

يَٰٓأَيُّهَا النَّبِيُّ إِنَّآ أَحْلَلْنَا لَكَ أَزْوَٰجَكَ

(५०) हे नबी ! हामीले तिम्रा लागि तिम्रा ती पत्नीहरु उचित (वैध) गरिदिएका छौं, जसलाई तिमी उनका महर

विवाहका पश्चात जुन स्त्रीहरुसित सहवास गरिसकिएको छ र त्यो अहिले युवती छ, यस्ता स्त्रीहरुलाई यदि तलाक् हुन्छ भने तिनको 'इद्दत' तीन मासिक धर्म छ । (अल बकर:-२२८) यहाँ ती स्त्रीहरुका लागि नियम भनिंदैछ जसका विवाह भएको छ किन्तु पति-पत्नीका मध्ये सहवास सम्बन्ध भएको छैन तिनलाई यदि तलाक् हुन्छ भने कुनै इद्दत छैन अर्थात् यस्ता बिना संभोग तलाक् प्राप्त स्त्री बिना इद्दत पूरा गरी तुरुन्त कहीं विवाह गर्न चाहन्छे भने गर्नसक्छे । हो, यदि सहवासभन्दा पहिले पतिको निधन हुनजान्छ भने त्यसले चार महिना दश दिन इद्दत व्यतीत गर्नुपर्नेछ । (फ़तहुल क़दीर, इब्ने क़सीर) स्पर्श गर्नु अथवा हात लगाउनु इंगित छ सहवास (संभोग) सित, निकाहको विशेष शब्द सहवास तथा विवाहको बन्धन दुवैका लागि प्रयोग हुन्छ । यहाँ विवाहको अर्थमा छ । यसै आयतबाट तर्क निकाल्दै यो पनि भनिएको छ कि विवाहभन्दा पहिला तलाक् (सम्बन्ध-विच्छेद) छैन किनकि यहाँ विवाहका पश्चात तलाक्को चर्चा छ । अत: जो धर्मविद (फुकहा) यो भन्दछन् कि कोही मैले अमूक स्त्रीसँग विवाह गरें त त्यसलाई तलाक्, त उनका मतका अनुसार त्यस स्त्रीसित विवाह हुनासाथ तलाक् हुनेछ यस्तै केही जसले यो भन्दछन् कि यदि त्यो यो भन्दछ कि मैले कुनै पनि स्त्रीसँग विवाह गरें त उसलाई तलाक्, त जुन स्त्रीसित पनि विवाह गर्नेछ, तलाक् (विवाह विच्छेद) भइहाल्नेछ । यो कुरो सही छैन । हदीसमा पनि प्रष्ट छ «لَا طَلَاقَ قَبْلَ نِكَاحٍ» (इब्ने माजा) «لَا طَلَاقَ لِابْنِ آدَمَ فِيمَا لَا يَمْلِكُ» (अबू दाऊद बाबुन फ़ित्तलाके क़बलन निकाहे, तिर्मिजी, इब्ने माजा एवं मुसनद अहमद २/१८९), यसमा स्पष्ट छ कि विवाहभन्दा पहिला विवाह विच्छेद (तलाक्) एउटा अनर्थ कर्म हो जसको धर्म विधानमा कुनै औचित्य छैन ।

[2]यो (मुत्आ), यदि महर (स्त्रीधन) निर्धारित छ भने आधा महर छ अन्यथा शक्तिका अनुसार केही दिइहालियोस् ।

[3]अर्थात् तिनीहरुलाई आदर तथा सम्मानका साथ बिना कुनै दुख पुऱ्याइ अलग गरियोस् ।

ٱلَّٰتِيٓ ءَاتَيۡتَ أُجُورَهُنَّ وَمَا مَلَكَتۡ يَمِينُكَ مِمَّآ أَفَآءَ ٱللَّهُ عَلَيۡكَ وَبَنَاتِ عَمِّكَ وَبَنَاتِ عَمَّٰتِكَ وَبَنَاتِ خَالِكَ وَبَنَاتِ خَٰلَٰتِكَ ٱلَّٰتِي هَاجَرۡنَ مَعَكَ وَٱمۡرَأَةً مُّؤۡمِنَةً إِن وَهَبَتۡ نَفۡسَهَا لِلنَّبِيِّ إِنۡ أَرَادَ ٱلنَّبِيُّ أَن يَسۡتَنكِحَهَا خَالِصَةً لَّكَ مِن دُونِ ٱلۡمُؤۡمِنِينَۗ قَدۡ عَلِمۡنَا مَا فَرَضۡنَا عَلَيۡهِمۡ فِيٓ أَزۡوَٰجِهِمۡ وَمَا مَلَكَتۡ أَيۡمَٰنُهُمۡ

(स्त्री-दान) दिइसकेका छौ[1] तथा ती दासीहरु पनि जो अल्लाह (तआ़ला) ले युद्धमा तिमीलाई प्रदान गरेको छ[2] तथा तिम्रा काकाका पुत्रीहरु, फुफीका पुत्रीहरु तिम्रा मामाका पुत्रीहरु तथा तिम्रा मौसीका पुत्रीहरु पनि जसले तिम्रो साथमा हिज़रत गरेका छन्,[3] तथा ती ईमान भएका महिला जो स्वयंलाई नबीलाई दान गरिदिन्छन्, यो त्यस अवस्थामा कि स्वयं यदि नबी पनि त्यससित विवाह गर्न चाहन्छ,[4] यो विशेषरुपले तिम्रो लागि नै हो तथा अन्य मुसलमानहरुका लागि होइन ।[5] हामी त्यसलाई राम्ररी

[1]केही धार्मिक नियमहरुमा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई विशेषता प्राप्त थियो, जसलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमको विशेषता भनिन्छ । जस्तै ज्ञानीहरुका एक गुटका मत अनुसार रात्रिको नमाज़ (तहज्जुद) उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई अनिवार्य थियो, सद्का (दान) आफ्नो लागि लिन निषेध थियो । यसैप्रकार केही विशेषताहरुको वर्णन यस स्थानमा गरिएको छ जसका सम्बन्ध विवाहसित छ । (१) जुन स्त्रीहरुलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमले महर दिनुभएको छ, ती वैध छन् चाहे संख्यामा तिनीहरु जतिसुकै होऊन् तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय सफीया तथा जुबैरीयाको महर तिनको स्वतन्त्रतालाई मान्नु भएको थियो । उनका अतिरिक्त नकदको रुपमा सबैको महर नजाशीले आफ्नो तर्फबाट दिएका थिए ।

[2]अत: आदरणीया सफिया तथा जुबैरीया दासीका रुपमा आउनु भएको थियो जसलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमले स्वतन्त्र गरी विवाह गर्नुभएको थियो तथा रेहाना एवं मारीया किब्तिया दासीका रुपमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमसित रहनुभयो ।

[3]यसको अर्थ हो कि जुनप्रकार उहाँ सल्लल्लाहु अलैहि वसल्लमले हिज़रत गर्नुभयो, त्यसैप्रकार उहाँहरुले पनि मक्काबाट मदीना हिज़रत गरे, किनकि उहाँ सल्लल्लाहु अलैहि वसल्लमका साथ कुनै पनि महिलाले हिज़रत गरेका थिएनन् ।

[4]अर्थात् स्वयं आफूलाई दान गर्ने महिला, यदि उहाँ सल्लल्लाहु अलैहि वसल्लम त्यससित विवाह गर्न चाहनुहुन्छ भने बिना महर उहाँ सल्लल्लाहु अलैहि वसल्लमका लागि त्यसलाई आफ्नो विवाहमा लिनु उचित छ ।

[5]यो अनुमति केवल उहाँ सल्लल्लाहु अलैहि वसल्लमका लागि छ, अन्य मुसलमानहरुलाई अनिवार्य छ कि उनीहरु महरका अधिकार देऊन् अनि विवाह वैध हुनेछ ।

لِكَيْلَا يَكُونَ عَلَيْكَ حَرَجٌ ۗ وَكَانَ اللَّهُ غَفُورًا رَّحِيمًا ۝

जान्दछौं जो हामीले उनका लागि उनका पत्नी एवं दासीहरुका विषयमा (आदेश) निर्धारित गरेका छौं,[1] यो यसकारण कि तिमीमाथि कुनै आपत्ति उत्पन्न नहोस् ।[2] अल्लाह (तआ़ला) अत्यन्त क्षमाशील एवं अत्यन्त दयावान छ ।

تُرْجِي مَنْ تَشَاءُ مِنْهُنَّ وَتُؤْوِي إِلَيْكَ مَنْ تَشَاءُ ۖ وَمَنِ ابْتَغَيْتَ مِمَّنْ عَزَلْتَ فَلَا جُنَاحَ عَلَيْكَ ۚ ذَٰلِكَ أَدْنَىٰ أَنْ تَقَرَّ أَعْيُنُهُنَّ وَلَا يَحْزَنَّ وَيَرْضَيْنَ بِمَا آتَيْتَهُنَّ كُلُّهُنَّ ۚ وَاللَّهُ يَعْلَمُ مَا فِي قُلُوبِكُمْ ۚ

(५१) उनीहरुमध्ये जसलाई तिमी चाहन्छौ दूर राख तथा जसलाई चाहन्छौ सँगै राख,[3] तथा यदि तिमी उनीहरुमध्येबाट पनि कसैलाई आफ्नो पासमा बोलाउँछौ जसलाई तिमीले अलग गरेका थियौ त तिमीमाथि कुनै आपत्ति छैन,[4] यसमा यस कुरोको अधिक आशा छ कि यी (स्त्रीहरु) का आँखा शीतल रहून् तथा उनीहरु दुखी नहोऊन् तथा जे-जति पनि तिमी उनलाई दिन्छौ त्यसबाट ती सबै प्रसन्न रहून्,[5] तिम्रा हृदयहरुमा

[1]अर्थात् विवाहका जो प्रतिबन्ध एवं अधिकार छन् जो हामीले अनिवार्य गरेका छौं, जस्तै चारभन्दा अधिक पत्नीहरु एकै समयमा कुनै व्यक्ति राख्न सक्दैन । विवाहका लागि संरक्षक साक्षी तथा महर आवश्यक छ । परन्तु दासीहरु जति पनि कोही चाहन्छ राख्न सक्छ, किन्तु दासीहरुको प्रचलन अब समाप्त भइसक्यो ।

[2]यसको सम्बन्ध إِنَّا أَحْلَلْنَا सित छ अर्थात् उक्त समस्त महिलाहरुलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमका लागि यसकारण उचित गरियो कि उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई संकोच प्रतीत नहोस् तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लम कसैसँग विवाहमा पाप नसम्झुन् ।

[3]यसमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको एउटा अन्य विशेषताको वर्णन छ । त्यो यो कि पत्नीहरुका मध्य क्रम निर्धारित गर्नुको अधिकार उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई दिइएको थियो । उहाँ सल्लल्लाहु अलैहि वसल्लम जसको क्रम चाहनुहुन्छ, स्थगित गरिदिनु हुन्छ, अर्थात् त्यसलाई साथमा राख्दै त्यससित सहवास गर्नुहुन्न तथा जससित चाहन्छन् यो सम्बन्ध स्थापित गर्नुहुन्छ ।

अर्थात् जुन पत्नीहरुका क्रम स्थगित गरिएको थियो । यदि उहाँ सल्लल्लाहु अलैहि वसल्लम चाहनुहुन्छ कि त्यससित सहवास गरियोस् त यो आज्ञा पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई प्राप्त थियो ।

[5]अर्थात् क्रम स्थगित हुनु तथा एकलाई अर्कोमाथि प्रथमिकता दिनुका उपरान्त पनि उनीहरु प्रसन्न हुनेछन्, दुखी हुने छैनन् तथा जे-जति उहाँ सल्लल्लाहु अलैहि वसल्लमको तर्फबाट प्राप्त हुन्छ त्यसमा सन्तुष्ट रहनेछन् ।

وَكَانَ اللّٰهُ عَلِيْمًا حَلِيْمًا ﴿٥١﴾

जे-जति छ, त्यसलाई अल्लाह (तआला राम्ररी) जान्दछ ।[1] अल्लाह (तआला) अधिक ज्ञान भएको सहनशील छ ।

لَا يَحِلُّ لَكَ النِّسَآءُ مِنْۢ بَعْدُ وَلَآ اَنْ تَبَدَّلَ بِهِنَّ مِنْ اَزْوَاجٍ وَّلَوْ

(५२) यसका पश्चात अन्य स्त्रीहरु उहाँका लागि वैध (हलाल) छैनन् तथा न यो (उचित छ) कि उनीहरुलाई छाडेर अन्य स्त्रीहरुसँग (विवाह) गरून् ।

किन ? यसकारण कि उनीहरुलाई ज्ञात छ कि सन्देष्टा यो सबै कुरा अल्लाहका आदेश एवं आज्ञा अनुसार गरिराख्नु भएछ तथा यी पवित्र पत्नीहरु अल्लाहका निर्णयमाथि प्रसन्न एवं सन्तुष्ट छन् । केही ज्ञाताहरु भन्छन् कि नबी सल्लल्लाहु अलैहि वसल्लमलाई यो अनुमति प्राप्त हुनुका उपरान्त पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यसलाई प्रयोग गर्नुभएको थिएन आदरणीय सौदह बाहेक (कि तिनले आफ्नो क्रम आफ्नो इच्छाले आदरणीया आयशालाई प्रदान गर्नुभएको थियो) उहाँ सल्लल्लाहु अलैहि वसल्लमले समस्त पवित्र पत्नीहरुका क्रम समानरुपले निर्धारित गर्नुभएको थियो । यसैले उहाँ सल्लल्लाहु अलैहि वसल्लमले अन्तिम समयमा पवित्र पत्नीहरुबाट आज्ञा लिई रोगको अवधि आदरणीय आयशाको पासमा व्यतीत गर्नुभयो । إِنَّا أَحْلَلْنَا को सम्बन्ध उहाँ सल्लल्लाहु अलैहि वसल्लमका यसै व्यवहारसित छ कि उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई क्रम निर्धारण (अन्य मानिसहरुको जस्तो) यद्यपि आवश्यक थिएन । यसका उपरान्त पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले क्रम विभाजनलाई अपनाउनु हो ताकि उहाँ सल्लल्लाहु अलैहि वसल्लमका पत्नीहरुका आँखालाई शीतलता प्राप्त होस्, तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमका यस सद्व्यवहार एवं न्यायबाट प्रसन्न होऊन् कि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यस विशेषाधिकारको प्रयोग गर्नु भएन बरु उनका सान्त्वना एवं प्रसन्नताको प्रयोजन गर्नुभयो ।

[1]अर्थात् तिम्रा हृदयमा जे-जति छ तिनमा यो कुरो पनि निश्चित रुपमा छ कि सबै पत्नीहरुको प्रेम हृदयमा समान छैन, किनकि हृदयमाथि कसैको अधिकार छैन । यसकारण पत्नीहरुका मध्येक्रममा, पालन-पोषण तथा अन्य जीवन हेतु तथा सुविधाहरुमा समानता आवश्यक छ, जसको प्रबन्ध मनुष्य गर्नसक्दछ । हृदयहरुका झुकावमा समता अधिकारमै छैन, यसकारण अल्लाह तआलाले त्यसमाथि पकड पनि गर्नेछैन यदि हार्दिक प्रेम कुनै एक पत्नीसित त्योसँग विशेष व्यवहारको कारण नहोस् । यसैकारण नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्ने गर्नुहुन्थ्यो, "हे अल्लाह ! यो जुन मेरो विभाजन छ जो मेरो अधिकारमा छैन, परन्तु जसमाथि तिम्रो अधिकार छ म त्यसमाथि अधिकार राख्दिन, त्यसमा मलाई लज्जितनगर्नू ।" (अबू दाऊद, तिर्मिजी, नसाई, इब्ने माजा तथा मुसनद अहमद ६/१४४)

أَعْجَبَكَ حُسْنُهُنَّ إِلَّا مَا مَلَكَتْ يَمِينُكَ ۗ وَكَانَ اللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ رَّقِيبًا ﴿٥٢﴾

(यद्यपि उनका रुप राम्रो पनि लाग्दछ[1] परन्तु जो तिम्रा दासीहरु होऊन्[2] अल्लाह (तआ़ला) प्रत्येक वस्तुको (पूर्ण) रक्षक छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَدْخُلُوا بُيُوتَ النَّبِيِّ إِلَّا أَن يُؤْذَنَ لَكُمْ إِلَىٰ طَعَامٍ غَيْرَ نَاظِرِينَ إِنَاهُ وَلَٰكِنْ إِذَا دُعِيتُمْ فَادْخُلُوا فَإِذَا طَعِمْتُمْ فَانتَشِرُوا وَلَا مُسْتَأْنِسِينَ لِحَدِيثٍ ۚ إِنَّ ذَٰلِكُمْ كَانَ يُؤْذِي النَّبِيَّ فَيَسْتَحْيِي مِنكُمْ ۖ وَاللَّهُ لَا يَسْتَحْيِي مِنَ الْحَقِّ ۚ وَإِذَا سَأَلْتُمُوهُنَّ مَتَاعًا فَاسْأَلُوهُنَّ

(५३) हे मुसलमानहरु ! जबसम्म तिमीलाई आज्ञा प्रदान गरिंदैन तिमी नबीका घरहरुमा नजाने गर खानका लागि यस्ता समयमा कि खाना पाक्नुको प्रतीक्षा गर्दैरहनु परोस्, बरु जब बोलाउन्छ तब जाउ तथा जब खाइसकेको हुन्छौ तब निस्केर जाउ, त्यहीं कुराहरुमा लीन नहोउ । नबीलाई तिम्रा यस व्यवहारबाट कष्ट हुन्छ । परन्तु उनी तिम्रो आदर गरिदिन्छन् तथा अल्लाह (तआ़ला) सत्यको वर्णन गर्नुमा कसैको चिन्ता गर्दैन ।[3] तथा जब

[1]अधिकारको आयत अवतरित हुनुको पश्चात पवित्र पत्नीहरुले सांसारिक सुख-सुविधाहरुका साधनहरुलाई त्यागेर कठिनाईसित नबी सल्लल्लाहु अलैहि वसल्लमका साथ रहनु रुचाएका थिए । यसको प्रतिफल अल्लाहले यो दियो कि पत्नीहरुका अतिरिक्त (जसका संख्या त्यस समय नौं थियो) अन्य स्त्रीहरुसँग विवाह गर्न अथवा उनीहरुमध्ये कसैलाई तलाक़ दिएर त्यसका स्थानमा कुनै अन्यसित विवाह गर्नबाट रोकिदियो । केही ज्ञाताहरु भन्छन् कि पछि उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई यो अधिकार दिएको थियो, परन्तु उहाँ सल्लल्लाहु अलैहि वसल्लमले कुनै विवाह गर्नुभएन । (इब्ने कसीर)

[2]अर्थात् दासीहरुलाई राख्नमा कुनै प्रतिबन्ध छैन, केही धर्म विशेषज्ञहरुले यसबाट यो भाव निकाल्नु भएको छ कि काफ़िर दासी पनि राख्नुको उहाँलाई अनुमति थियो तथा केहीले ﴿وَلَا تُمْسِكُوا بِعِصَمِ الْكَوَافِرِ﴾ (अल-मुम्तहिना-१०) का अनुसार यसलाई उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) का लागि उचित (वैध) ठान्नुभएन (फ़तहुल क़दीर)

[3]यस आयतका अवतरण हुनुको कारण यो हो कि नबी सल्लल्लाहु अलैहि वसल्लमका निमन्त्रणमा सहाबा किराम उपस्थित भए, जसमध्ये केही खानुका पश्चात पनि बसि कुरा गर्दैरहे जसबाट उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई विशेष कष्ट भयो परन्तु उहाँ सल्लल्लाहु अलैहि वसल्लमले शिष्टाचार एवं व्यवहारका कारण उनलाई जानको लागि भन्नुभएन । (सहीह बुख़ारी व्याख्या सूरतुल अहज़ाब) अत: यस आयतमा भोजका शिष्टाचार सिकाइए कि प्रथम त त्यतिखेर जाउ, जब भोजन तयार भइसकेको हुन्छ, पहिले देखि नै धर्ना दिएर

مِنْ وَّرَآءِ حِجَابٍ ۭ ذٰلِكُمْ اَطْهَرُ لِقُلُوْبِكُمْ وَقُلُوْبِهِنَّ ۭ وَمَا كَانَ لَكُمْ اَنْ تُؤْذُوْا رَسُوْلَ اللّٰهِ وَلَآ اَنْ تَنْكِحُوْٓا اَزْوَاجَهٗ مِنْۢ بَعْدِهٖٓ اَبَدًا ۭ اِنَّ ذٰلِكُمْ كَانَ عِنْدَ اللّٰهِ عَظِيْمًا ۝

तिमी नबीका पत्नीहरुबाट कुनै वस्तु माँग्छौ भने पर्दाका पछाडीबाट माँग ।[१] तिम्रा तथा तिनका हृदयहरुका लागि पूर्ण पवित्रता यही हो ।[२] न तिमीलाई उचित छ कि तिमी अल्लाहका रसूललाई कष्ट देउ[३] तथा न तिमीलाई यो वैध (उचित) छ कि उहाँका पश्चात कुनै समय पनि उहाँका पत्नीसित विवाह गर । (याद राख) अल्लाहका निकट यो अति ठूलो (पाप) हो ।[४]

न बसिराख । द्वितीय भोजन समाप्त गर्नुका तुरुन्त उपरान्त घरहरुतिर हिंडिहाल, त्यहाँ बसेर कुरा नगर । भोजनको वर्णन त अवतरित हुनका कारण गरिएको छ अन्यथा अर्थ त यो कि जहिले पनि बोलाइन्छ चाहे खानका लागि अथवा कुनै अन्य कार्यका लागि आज्ञाबिना घरमा प्रवेश नगर ।

[१]यो आदेश आदरणीय उमरको इच्छाको अनुरुप अवतरित भयो । आदरणीय उमरले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित निवेदन गरे कि हे रसूलुल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) ! तपाईं सल्लल्लाहु अलैहि वसल्लमका पासमा राम्रा-नराम्रा धेरै मानिसहरु आउँछन्, काश तपाईं सल्लल्लाहु अलैहि वसल्लम पवित्र पत्नीहरुलाई पर्दाको आदेश दिनुभए त कति राम्रो हुन्थ्यो । यसप्रकार यो आदेश अल्लाहले अवतरित गर्यो (सहीह बुखारी किताबुस्सलात तथा तफ़सीर सूरः अल-बक़रः, मुस्लिम बाबु फज़ाईले उमर बिन ख़त्ताब)

[२]यो पर्दाको रहस्य एवं कारण हो कि यसबाट स्त्री-पुरुष दुबैका हृदय संशय एवं शंकाबाट तथा परस्पर उपद्रवमा पर्नुबाट सुरक्षित रहनेछन् ।

[३]चाहे त्यो कुनै रुपमा होस् । उहाँ सल्लल्लाहु अलैहि वसल्लमका घरमा बिना आज्ञा प्रवेश गर्नु उहाँ सल्लल्लाहु अलैहि वसरुल्लमको इच्छा बिना घरमा बसिरहनु तथा बिना पर्दा पवित्र पत्नीहरुसित कुराकानी गर्नु, यी कार्य पनि कष्टदायक हुन्, यिनीबाट पनि बच ।

[४]यो आदेश ती पवित्र पत्नीहरुका विषयमा छ जो मृत्युका समय नबी सल्लल्लाहु अलैहि वसल्लमका विवाह बन्धनमा थिए । तैपनि जसलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमले सहवासका पश्चात जीवनकालमा नै तलाक़ दिएर आफूबाट अलग गरिदिनु भएको थियो, तिनी यसमा सम्मिलित छन् अथवा छैनन ? यसमा दुई मत छन् । केही ज्ञाताहरु तिनलाई पनि सम्मिलित मान्दछन् तथा केहीले मान्दैनन् । परन्तु उहाँ सल्लल्लाहु अलैहि वसल्लमका यस्तो कुनै पत्नी नै थिइन । यसकारण त्यो केवल एउटा अनुमान हो । यसका अतिरिक्त तेस्रो प्रकार ती स्त्रीहरुको हो जोसित उहाँ सल्लल्लाहु अलैहि वसल्लमको विवाह भयो परन्तु सहवासभन्दा पूर्व नै

إِن تُبْدُوا شَيْئًا أَوْ تُخْفُوهُ فَإِنَّ اللَّهَ كَانَ بِكُلِّ شَيْءٍ عَلِيمًا ﴿٥٤﴾

(५४) यदि तिमी कुनै कुरालाई प्रकट गर्दछौ अथवा लुकाउँछौ भने अल्लाहलाई प्रत्येक कुरोको राम्रो ज्ञान छ ।

لَّا جُنَاحَ عَلَيْهِنَّ فِي آبَائِهِنَّ وَلَا أَبْنَائِهِنَّ وَلَا إِخْوَانِهِنَّ وَلَا أَبْنَاءِ إِخْوَانِهِنَّ وَلَا أَبْنَاءِ أَخَوَاتِهِنَّ وَلَا نِسَائِهِنَّ وَلَا مَا مَلَكَتْ أَيْمَانُهُنَّ ۗ وَاتَّقِينَ اللَّهَ ۚ إِنَّ اللَّهَ كَانَ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدًا ﴿٥٥﴾

(५५) ती महिलाहरुलाई कुनै पाप छैन कि उनी आफ्ना पिता, आफ्ना पुत्र एवं दाजुभाइ, आफ्ना भतिजा, भानिज एवं आफ्ना (मेलजोल भएका) महिलाहरु तथा स्वामित्वका अधीनस्थ (दासी, दास) का सामु (प्रत्येक्ष रुपमा) होऊन् ।[1] (महिलाहरु !) अल्लाहसित तर्सदै गर । अल्लाह तआला निःसन्देह हरेक कुरोमा साक्षी छ ।[2]

إِنَّ اللَّهَ وَمَلَائِكَتَهُ يُصَلُّونَ عَلَى النَّبِيِّ ۚ يَا أَيُّهَا الَّذِينَ آمَنُوا صَلُّوا عَلَيْهِ وَسَلِّمُوا تَسْلِيمًا ﴿٥٦﴾

(५६) अल्लाह (तआला) तथा त्यसका फरिश्ताहरु त्यस नबीमाथि दरूद पठाउँ तथा अधिक सलाम (पनि) पठाउँदै गर ।[3]

तिनलाई उहाँ सल्लल्लाहु अलैहि वसल्लमले तलाक् दिइदिनु भयो । तिमीसित अन्य मानिसहरुले विवाह गर्नुमा कुनै मतभेद ज्ञात छैन । (तफ़सीर इब्ने कसीर)

[1]जब महिलाहरुका लागि पर्दाको आदेश अवतरित भयो, त त्यस पश्चात घरमा उपस्थित निकट अथवा हर समय आवत-जावत गर्ने सम्बन्धिहरुका विषयमा प्रश्न उठ्यो कि उनीसित पर्दा गरियोस् अथवा नगरियोस् । यस आयतमा ती सम्वन्धिहरुको वर्णन छ जससित पर्दाको आवश्यकता छैन । यसको विस्तृत वर्णन सूरः नूरको आयत ३१ ﴿وَلَا يُبْدِينَ زِينَتَهُنَّ﴾ मा गुज्रिसकेको छ, त्यसलाई हेर्नुस् ।

[2]यस स्थानमा महिलाहरुलाई अल्लाहका भयको आदेश दिएर यो स्पष्ट गरियो कि यदि हृदयमा अल्लाहको भय छ भने पर्दाको जुन मूल उद्देश्य हृदय एवं दृष्टिको पवित्रता तथा सम्मानको रक्षा हो त्यो अवश्य तिमीलाई प्राप्त हुनेछ, अन्यथा देखावटी पर्दाको प्रतिबन्ध तिमीलाई पापमा लीन हुनबाट बचउन सक्नेछैन ।

[3]यस आयतमा नबी सल्लल्लाहु अलैहि वसल्लमका त्यस पद एवं गरिमाको वर्णन छ, जो आकाशहरुमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई प्राप्त छ तथा त्यो यो हो कि अल्लाह तआला फरिश्ताहरु उहाँ सल्लल्लाहु अलैहि वसल्लमको प्रशंसा एवं बढाई गर्दछ र शान्ति पठाउँछ तथा फरिश्ताहरु पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमका लागि उच्च स्थानका लागि प्रार्थना गर्दछन् ।

(५७) जो मानिस अल्लाह तथा त्यसका रसूललाई कष्ट दिन्छन् तिनीहरुमाथि संसार तथा आख़िरतमा अल्लाहको धिक्कार छ तथा उनका लागि अत्यन्त अपमानित गर्ने यातना छ ।[1]

إِنَّ الَّذِينَ يُؤْذُونَ اللَّهَ وَرَسُولَهُ لَعَنَهُمُ اللَّهُ فِي الدُّنْيَا وَالْآخِرَةِ وَأَعَدَّ لَهُمْ عَذَابًا مُّهِينًا ﴿٥٧﴾

त्यसका साथ-साथै अल्लाह तआ़लाले धर्तीवालाहरुलाई आदेश दियो कि उनीहरु पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि सलात तथा सलाम पठाऊन् ताकि उहाँ सल्लल्लाहु अलैहि वसल्लमको प्रशंसामा धर्ती एवं आकाश दुबै लोक सम्मानित होऊन् । हदीसमा वर्णित छ कि सहाबा किरामले निवेदन गरे, हे रसूलुल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) सलामको विधि त हामी जान्दछौं । (अर्थात तहीयातमा السلام عليك أيها النبي पढ्छन्) हामीले दरूद कसरी पढौं, यसमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमले त्यो दरूद इब्राहीमी भन्नुभो जो नमाज़मा पढिन्छ । (सहीह बुख़ारी तफ़सीर सूरः अहज़ाब) यसका अतिरिक्त हदीसमा दरूदका अन्य रुप पनि आउँछन्, जो पढ्न सकिन्छन्, यसका अतिरिक्त संक्षिप्तमा 'सल्लल्लाहु अलैहि वसल्लम' पनि पढ्न सकिन्छ तैपनि 'अस्सलातो वस्सलामो अलैक या रसूलुल्लाह' पढ्नु यसकारण ठीक छैन कि यसमा नबी सल्लल्लाहु अलैहि वसल्लमसित सम्बोधन छ र यस्ता शब्दहरुका साथ सामान्य दरूद उहाँबाट साबित छैन । केवल तहीयातमा साबित छ । यसकारण त्यसै समय त्यसलाई जसरी प्रमाणित छ, पढ्नु पर्दछ । जहाँसम्म त्यसलाई पढ्ने केही व्यक्तिहरु यस भ्रमपूर्ण विश्वासमा पढ्दछन् कि उहाँ सल्लल्लाहु अलैहि वसल्लम सिधै स्वयं सुन्नुहुन्छ । यो विश्वास कुरआन एवं हदीसका विरुद्ध छ, जो पुण्य होइन पाप हो । हदीसहरुमा दरूदको विशेष महत्व भनिएको छ । नमाज़मा यसलाई पढ्नु आवश्यक एवं सुन्नत छ ? ज्ञानीहरुको बहुमत सुन्नत हुनुका पक्षमा छ तथा इमाम शाफ़ई एवं धेरैजसो ज्ञानी आवश्यक हुनुका पक्षमा छन् । परन्तु हदीसहरुमा यो आवश्यक नै हुनुको पुष्टि हुन्छ । यसैप्रकार हदीसबाट यो पनि ज्ञात हुन्छ कि जुनप्रकार अन्तिम तशहहुदमा पनि दरूद पढ्नुको त्यही स्थान छ । यसकारण नमाज़का दुबै तशहहूदमा दरूद पढ्नु आवश्यक छ ।

[1]अल्लाहलाई कष्ट दिनुको अर्थ यी समस्त कार्यहरुलाई गर्नु हो जसलाई उसले अप्रिय भनेको छ, अन्यथा अल्लाहलाई कष्ट दिनुको कसले सामर्थ्य राख्दछ ? जस्तै मूर्तिपूजक, यहूदी तथा इसाई आदि अल्लाहका लागि सन्तान सिद्ध गर्दछन् । अथवा जुनप्रकार हदीस कुद्सीमा छ कि अल्लाह तआ़ला भन्नुहुन्छ, "आदमका सन्तान मलाई कष्ट दिन्छन्, युगलाई अपशब्द भन्छन् जबकि म नै युग हूँ, त्यसका दिन तथा रात्रिका चक्र मेरै आदेशले चल्छ ।" (सहीह बुख़ारी तफ़सीर सूरः अल-जासिया र मुस्लिम किताबुल अलफाज़ मिनल अदब, बाब अन्नही मिन सब्बिद्दहरे) अर्थात् यो भन्नु कि काल वा आकाशको यस चक्रले यस्तो गरिदियो यो उचित छैन, यसकारण कि कार्य अल्लाहका हुन् काल अथवा

وَالَّذِينَ يُؤْذُونَ الْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ بِغَيْرِ مَا اكْتَسَبُوا فَقَدِ احْتَمَلُوا بُهْتَانًا وَإِثْمًا مُّبِينًا ﴿٥٨﴾

(५८) तथा जो मानिस ईमान भएका पुरुष एवं ईमान भएका महिलाहरुलाई कष्ट दिन्छन् बिना कुनै अपराधका कारण जो उनीबाट भएको होस्, उनी (अत्यन्त) आक्षेप तथा खुल्ला रुपमा पापको बोध उठाउनेछन् ।[1]

يَا أَيُّهَا النَّبِيُّ قُل لِّأَزْوَاجِكَ وَبَنَاتِكَ وَنِسَاءِ الْمُؤْمِنِينَ يُدْنِينَ عَلَيْهِنَّ مِن جَلَابِيبِهِنَّ ۚ ذَٰلِكَ أَدْنَىٰ أَن يُعْرَفْنَ

(५९) हे नबी ! आफ्ना पत्नीहरुसित तथा आफ्ना पुत्रीहरुसित तथा मुसलमानका महिलाहरुसित भनिदिनुस् कि उनी आफूमाथि आफ्ना च्यादरका केही भाग झुण्ड्याउने गरून्,[2] यसबाट तुरुन्त उनका

आकाशका होइनन् । अल्लाहका रसूललाई कष्ट पुऱ्याउनु, उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई झुठ्लाउनु, उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई कवि, झुठा, जादूगर आदि भन्नु हो । यसका अतिरिक्त केही हदीसहरुबाट सहाबा किरामलाई दुख पुऱ्याउनु तथा उनका अपमान एवं अवहेलनालाई पनि उहाँ सल्लल्लाहु अलैहि वसल्लमले कष्ट भन्नुभएको छ । धिक्कारको अर्थ अल्लाहको दयाबाट टाढा एवं बञ्चित हुनु हो ।

[1]अर्थात् उनलाई बदनाम गर्नका लागि उनीमाथि आरोप लगाउनु, उनलाई अनुचित रुपले निरादार एवं अपमान गर्नु, जस्तै केही पथ-विचलित मानिस बेलुका-बिहान सहावा किरामलाई अपशब्द भन्छन् तथा उनीसित यस्ता कुरा सम्बन्धित गर्दछन् जसलाई उनले गर्दै गरेनन् । इमाम इब्ने कसीर भन्दछन् 'वक्र हृदय राफ़ज़ी प्रशंसित मानिसहरुको भर्त्सना गर्दछन् तथा भ्रष्ट मानिसहरुको प्रशंसा गर्दछन् ।

[2] جلابيب (बहुवचन हो) جلباب को जुन यस्तो ठूलो च्यादरलाई भन्दछन् जसबाट पूरा शरीर छोपियोस् । आफूमाथि च्यादर झुण्ड्याउनुबाट तात्पर्य यो हो कि आफ्नो मुखमाथि यसप्रकार घुम्टो निकालियोस् कि जसबाट मुखको अधिकतर भाग ढाकियोस् तथा आँखा तल पारेर हिंड्दा त्यसलाई मार्ग पनि देखियोस् । नेपाल, भारत, पाकिस्तान तथा अन्य इस्लामिक देशहरुमा जुन नक़ाबको प्रचलन छ यो रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका समयमा थिएन, अनि तत्पश्चात यसमा त्यो सादगी रहेन जुन रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम, सहाबा किराम एवं ताबेईनको समयमा थियो, महिलाहरु सादा वस्त्र लगाउँथे, श्रृङ्गार-पटार तथा वस्त्रहरुका प्रदर्शनको ध्यान थिएन । यसकारण एउटा ठूलो च्यादर (शल) बाट पनि पर्दाका उद्देश्य पूरा हुन्थे । परन्तु पछि यो सादगी रहेन । त्यसको स्थान शोभा एवं श्रृङ्गारले लियो तथा महिलाहरुमा चमकदार वस्त्र तथा आभूषणको प्रदर्शन सामान्य भयो, च्यादरबाट पर्दा गर्न कठिन भयो तथा त्यसको स्थानमा विभिन्न प्रकारका नकाबहरुको चलन भयो । यद्यपि यसबाट महिलालाई कैयन् पटक, विशेषरुपले अत्याधिक गर्मीमा केही परेशानी पनि हुन्छ परन्तु यो अलिकति पिडा धार्मिक नियमहरुका

فَلَا يُؤْذَيْنَ ۗ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ﴿٥٩﴾

पहिचान भइहाल्नेछ अनि कष्ट पुऱ्याउने छैनन्,[1] तथा अल्लाह (तआ़ला) अत्यन्त क्षमाशील एवं दयालु छ ।

لَئِنْ لَّمْ يَنْتَهِ الْمُنٰفِقُوْنَ وَالَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ وَّالْمُرْجِفُوْنَ

(६०) यदि (अहिले पनि) यी मुनाफ़िक (मिथ्याचारी) तथा उनीहरु जसका हृदयमा रोग छ तथा मदीनाका ती वासी जो गलत अफ़वाह फैलाउनेवाला छन्,[2]

माँगका समक्ष कुनै महत्व राख्दैन । तैपनि जुन महिलाहरु नकाबका स्थानमा ठूलो चादरको प्रयोग गर्दछन् तथा पुरा शरीरलाई ढाक्छन् तथा मुखमाथि उचित अर्थहरुमा घुम्टो निकाल्छन्, तिनीहरु निश्चित रुपमा पर्दाका आदेशको पालन गर्दछन्, किनकि नक़ाब यस्तो अनिवार्य वस्तु होइन जसलाई धार्मिक नियमहरुले पर्दाका लागि अनिवार्य गरेका छन् । परन्तु आजकल महिलाहरुले च्यादरलाई बेपर्दा हुनुका साधन बनाएका छन् । पहिला नकाबको स्थानमा तिनीहरु चादर ओढ्न प्रारम्भ गर्दछन् पछि चादर पनि हराएर जान्छ, केवल दुपट्टा रहन्छ । केही महिलाहरुलाई यसको प्रयोग पनि कठिन प्रतीत हुन्छ, यस परिस्थितिलाई मध्यनजर राख्दा यो भन्नुपर्छ कि अब नक़ाबको प्रयोग नै उचित छ किनभने जबदेखि नकाबको स्थान चादरले लिएको छ बेपर्दगी सामान्य रुपमा व्याप्त भइसकेको छ, बरु महिलाहरु अर्धनग्नतामाथि गर्व गर्न थालेका छन् । यस आयतमा नबी सल्लल्लाहु अलैहि वसल्लमका पत्नी एवं पुत्रीहरु तथा सामान्यत: ईमान भएका महिलाहरुलाई घरबाट निस्कँदाखेरि पर्दाको आदेश दिइएको छ, जसबाट यो स्पष्ट छ कि पर्दाको आदेश आलिमहरुको उत्पत्ति होइन (जस्तो कि अचेल केही मानिसहरु भन्दछन्) अथवा जसलाई विशेष महत्व दिँदैनन्, बरु यो अल्लाहको आदेश हो जो कुरआन करीमका सुत्रहरुबाट सिद्ध छ । यसबाट विमुखता, अस्वीकृति तथा बेपर्दगीको हठ कुफ्रसम्म पुग्दछ । अर्को कुरा यसबाट यो ज्ञात भयो कि नबी सल्लल्लाहु अलैहि वसल्लमकि एउटी पुत्री थिइन जस्तो कि शियाहरुको विश्वास छ बरु उहाँ सल्लल्लाहु अलैहि वसल्लमका एकभन्दा अधिक पुत्रीहरु थिए । जस्तो कि कुरआनका शब्दहरुबाट विदित हुन्छ तथा तिनीहरु संख्यामा चार थिए, जस्तो कि इतिहास तथा सन्देष्टा जीवनी एवं हदीसबाट सिद्ध छ । (विस्तृत जानकारीका लागि पढ्नुहोस् "अर्रहीकुल् मख्तूम" । लेखक सफीउर्रह्मान मुबारकपुरी पृष्ठ :१११ ऊर्दू-तेस्रो संस्करण १९८८)

[1]यो पर्दाका रहस्य तथा त्यसका लाभको वर्णन हो कि यसबाट एउटा सम्मानित तथा सभ्य महिला एवं असभ्य तथा कुकर्मी महिलाका मध्ये पहिचान हुनेछ । पर्दाबाट ज्ञात हुनेछ कि यो सम्मानित परिवारको महिला हो जससित छेडछाड गर्न कसैलाई साहस हुनेछैन, यसका विपरीत, बेपर्दा महिलाहरु असभ्य पुरुषहरुको दृष्टिको केन्द्र तथा उनको कामवासनाको निशाना बन्नेछन् ।

[2]मुसलमानहरुको साहस कम गर्नका लागि मुनाफ़िक अफवा फैलाउने गर्दथे कि मुसलमान क्षेत्रमा पराजित भए, अथवा शत्रुहरुको ठूलो संख्या भएको सेना आक्रमणको लागि आउँदै गरेको छ आदि-आदि ।

فِي الْمَدِينَةِ لَنُغْرِيَنَّكَ بِهِمْ ثُمَّ لَا يُجَاوِرُونَكَ فِيهَا إِلَّا قَلِيلًا ﴿٦٠﴾

त्यसलाई छाड्दैनन् भने हामीले तपाईंलाई उनका (विनाश) मा लगाइदिनेछौं यसपश्चात त उनी केही दिन मात्र तपाईंका साथ यस (नगर) मा रहन सक्नेछन् ।

مَلْعُونِينَ ۖ أَيْنَمَا ثُقِفُوا أُخِذُوا وَقُتِّلُوا تَقْتِيلًا ﴿٦١﴾

(६१) उनीमाथि धिक्कार पठाइयो, जहाँपनि भेटिन्छन् समातिनेछन् तथा निकै टुक्रा-टुक्रा गरिनेछन् ।[1]

سُنَّةَ اللَّهِ فِي الَّذِينَ خَلَوْا مِن قَبْلُ ۖ وَلَن تَجِدَ لِسُنَّةِ اللَّهِ تَبْدِيلًا ﴿٦٢﴾

(६२) उनीभन्दा पूर्वका मानिसहरुमा पनि अल्लाहको यही नियम लागू रहयो । तथा तिमी अल्लाहका नियममा कहिल्यै पनि परिवर्तन पाउने छैनौ ।

يَسْأَلُكَ النَّاسُ عَنِ السَّاعَةِ ۖ قُلْ إِنَّمَا عِلْمُهَا عِندَ اللَّهِ ۚ وَمَا يُدْرِيكَ لَعَلَّ السَّاعَةَ تَكُونُ قَرِيبًا ﴿٦٣﴾

(६३) मानिसहरु तपाईंसित क़ेयामतका विषयमा प्रश्न गर्दछन् । (तपाईं) भनिदिनुस् कि यसको ज्ञान त अल्लाहलाई नै छ, तपाईंलाई के थाहा, अति सम्भव छ कि क़ेयामत अत्यन्त निकट होस् ।

إِنَّ اللَّهَ لَعَنَ الْكَافِرِينَ وَأَعَدَّ لَهُمْ سَعِيرًا ﴿٦٤﴾

(६४) अल्लाह (तआ़ला) ले काफिरहरुमाथि धिक्कार पठाएको छ तथा उनका लागि उत्तेजित अग्नि तयार गरेको छ ।

خَالِدِينَ فِيهَا أَبَدًا ۖ لَّا يَجِدُونَ وَلِيًّا وَلَا نَصِيرًا ﴿٦٥﴾

(६५) जसमा उनी सधैं रहनेछन्, उनीहरु कोही पक्षधर एवं सहायता गर्नेवाला पाउने छैनन् ।

يَوْمَ تُقَلَّبُ وُجُوهُهُمْ فِي النَّارِ يَقُولُونَ يَا لَيْتَنَا أَطَعْنَا اللَّهَ وَأَطَعْنَا الرَّسُولَا ﴿٦٦﴾

(६६) त्यस दिन उनका मुख आगोमा ओल्टाइने-पल्टाइने छन् । (पश्चाताप तथा खेदले) भन्नेछन् कि काश हामीले अल्लाह (तआ़ला) तथा रसूलको आज्ञापालन गरेको भए ।

[1]यो आदेश होइन कि उनलाई समाति-समाति मारिहालियोस् बरु यो शाप हो कि उनीहरु आफ्ना भ्रष्ट आचरण तथा यी गतिविधिहरुबाट रोकिएनन् भने उनको अत्यन्त शिक्षाप्रद दुष्परिणाम हुनेछ । केही विद्वानहरु भन्छन् कि यो आदेश हो । परन्तु यी द्वयवादी आयतका अवतरण पश्चात रोकिहालेका थिए, यसकारण उनका विरूद्ध यो कार्यवाही गरिएन जसको आदेश यस आयतमा दिइएको थियो । (फ़तहुल क़दीर)

وَقَالُوا رَبَّنَا إِنَّا أَطَعْنَا سَادَتَنَا وَكُبَرَاءَنَا فَأَضَلُّونَا السَّبِيلَا ﴿٦٧﴾

(६७) तथा उनीहरुले भन्नेछन्, हे हाम्रा प्रभु ! हामीले आफ्ना प्रमुख एवं ठूलाको आज्ञा मान्यौं जसले हामीलाई सत्य-मार्गबाट विचलित गरिदियो ।[1]

رَبَّنَا آتِهِمْ ضِعْفَيْنِ مِنَ الْعَذَابِ وَالْعَنْهُمْ لَعْنًا كَبِيرًا ﴿٦٨﴾

(६८) हे हाम्रा प्रभु ! तिमी उनीहरुलाई दोब्बर यातना देउ तथा उनीमाथि अत्यन्त ठूलो धिक्कार पठाउ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَكُونُوا كَالَّذِينَ آذَوْا مُوسَىٰ فَبَرَّأَهُ اللَّهُ مِمَّا قَالُوا وَكَانَ عِندَ اللَّهِ وَجِيهًا ﴿٦٩﴾

(६९) हे ईमानवालाहरु ! ती मानिसहरु जस्तो नबन जसले मूसालाई कष्ट पुऱ्याए, त जुन कुरा उनले भनेका थिए अल्लाहले उनलाई त्यसबाट मुक्त गरिदिए,[2] तथा उनी अल्लाहका समक्ष सम्मानित थिए ।

[1]अर्थात् हामीले तिम्रा सन्देष्टा तथा धर्मप्रचारकहरुका साटो आफ्ना ती ठूला एवं पूर्वजहरुको अनुकरण गऱ्यौं, परन्तु आज हामीलाई ज्ञात भयो कि उनीहरुले हामीलाई तिम्रा सन्देष्टाहरुबाट टाढा राखेर सोझो मार्गबाट विचलित राखे । पूर्वजहरुको अनुसरण एवं महानुभावहरुका अनुकरण आज पनि मानिसहरुमा पथ-विचलनको कारण छ । काश, मुसलमान अल्लाहका आयतहरुमाथि विचार गरी यी पथहरुबाट निस्कुन् तथा कुरआन तथा हदीसका सोझो मार्गलाई अप्नाऊन् किनकि मोक्ष केवल अल्लाह तथा अल्लाहका रसूल सल्लल्लाहु अलैहि वसल्लमका अनुसरणमा नै छ न कि धर्मगुरुहरु तथा ठूलाका अनुसरणहरुमा अथवा पूर्वजहरुका प्राचीन रीति-रिवाजलाई अपनाउनमा ।

[2]यसको व्याख्या हदीसमा यसप्रकार आएको छ कि आदरणीय मूसा अलैहिस्सलाम अति लज्जाशील थिए, अतः आफ्नो शरीर कहिल्यै उनले कसैका समक्ष नग्न गरेनन् । इस्राईली वंशका मानिसहरु भन्नथाले कि शायद मूसाको शरीरमा सेतो दाग अथवा अन्य यसैप्रकारको रोग छ, यसकारण हरेक समय वस्त्र लगाएर ढाकिएको रहन्छ । एक-पटक एकान्तमा आदरणीय मूसा स्नान गर्नलागे, लुगा झिकेर एउटा ढुङ्गामा राखिदिए । ढुङ्गा (अल्लाहको आदेशले) वस्त्र लिएर भागिहाल्यो । आदरणीय मूसा त्यसका पछि-पछि दगुरे यहाँसम्मकि इस्राईलहरुको एउटा सभामा पुगे, उनीहरुले आदरणीय मूसालाई नग्नवस्था देखे त उनका समस्त सन्देह समाप्त भए । मूसा अत्यन्त सुन्दर, आकर्षक तथा हरप्रकारका दागबाट शुद्ध थिए । यसप्रकार अल्लाह तआलाले चमत्कारिक रुपमा ढुङ्गाद्वारा उनका यस आक्षेप एवं शंकालाई समाप्त पारिदियो जो इस्राईलका सन्तानतिरबाट उनीमाथि लगाइन्थ्यो । (सहीह बुख़ारी किताबुल अम्बिया) आदरणीय मूसाद्वारा ईमान भएकाहरुलाई सम्झाइँदै छ कि तिमी हाम्रा अन्तिम सन्देष्टा परम आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اتَّقُوا اللَّهَ وَقُولُوا قَوْلًا سَدِيدًا ﴿٧٠﴾

(७०) हे ईमान भएकाहरु ! अल्लाह (तआ़ला) सित तर्स तथा सिधा-सिधा (सत्य) कुरा गर्नेगर ।[1]

يُصْلِحْ لَكُمْ أَعْمَالَكُمْ وَيَغْفِرْ لَكُمْ ذُنُوبَكُمْ ۗ وَمَن يُطِعِ اللَّهَ وَرَسُولَهُ فَقَدْ فَازَ فَوْزًا عَظِيمًا ﴿٧١﴾

(७१) ताकि अल्लाह (तआ़ला) तिम्रा कार्य सुधारदेओस् तथा तिम्रा पापलाई क्षमा गरिदेओस्,[2] तथा जसले पनि अल्लाह तथा त्यसका रसूलका आदेशहरु पालना गर्नेछ त्यसले ठूलो सफलता प्राप्त गर्‍यो ।

إِنَّا عَرَضْنَا الْأَمَانَةَ عَلَى السَّمَاوَاتِ وَالْأَرْضِ وَالْجِبَالِ فَأَبَيْنَ أَن يَحْمِلْنَهَا وَأَشْفَقْنَ مِنْهَا

(७२) हामीले आफ्नो अमानतलाई आकाशहरु तथा धर्ती एवं पर्वतहरु समक्ष प्रस्तुत गर्‍यौं (परन्तु) सबैले त्यसलाई लिनबाट इन्कार गरिदिए तथा त्यसबाट तर्सिहाले, (परन्तु) मनुष्यले

इस्राईलीहरुको जस्तै कष्ट नपुर्‍याउ तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमका विषयमा यस्ता कुरा नगर जसलाई सुनेर उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) पिडा एवं दुखको संवेदन गर्नुहुन्छ, जस्तै एउटा अवसरमा युद्धमा प्राप्त परिहारका विभाजनका समय एउटा व्यक्तिले भनेको थियो कि यसमा न्यायसित काम लिइएन । जब उहाँ सल्लल्लाहु अलैहि वसल्लमसम्म यी शब्द पुगे त उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई क्रोध आयो, यहाँसम्मकि उहाँ सल्लल्लाहु अलैहि वसल्लमको मुख रातो भयो । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "मूसामाथि अल्लाहको दया होस्, उनलाई यसबाट कहीं अधिक पिडा पुर्‍याइयो परन्तु उनले धैर्य गरे ।" (बुख़ारी किताबुल अम्बिया र मुस्लिम किताबुज़्ज़कात वावु ऐताईल मुअल्लाफति कुलूबोहुम अलल् इस्लाम)

[1]अर्थात् यस्तो कुरो जसमा त्रुटि एवं बाङ्गोपन होस् न धोखा होस्, बरु सत्य होस् । سَدِيدٌ शब्द تَسْدِيدُ السَّهم बाट छ, अर्थात् जुनप्रकार तीर (वाण) लाई सोझो गरिन्छ ताकि सही निशानामा लागोस्, त्यसैप्रकार तिम्रो मुखबाट निस्केको कुरा तथा तिम्रो व्यवहार एवं आचरण सोझो मार्गमा आधारित होस्, सत्य एवं सत्यताबाट अलिकति पनि विचलित नहोस् ।

[2]यो अल्लाहसित भय तथा सत्य वचनको परिणाम हो कि तिम्रा कर्महरुमा सुधार हुनेछ तथा अन्य पुण्य कर्महरुबाट सुशोभित गरिनेछौ तथा केही कमी अथवा आलस्यता रहनेछ भने त्यसलाई अल्लाह तआ़ला क्षमा गर्नेछ ।

وَحَمَلَهَا الْإِنسَانُ ۖ إِنَّهُ كَانَ ظَلُومًا جَهُولًا ﴿٧٢﴾

त्यसलाई लिइहाल्यो,[1] त्यो अत्यन्त अत्याचारी मूर्ख छ।[2]

لِّيُعَذِّبَ اللَّهُ الْمُنَافِقِينَ وَالْمُنَافِقَاتِ وَالْمُشْرِكِينَ وَالْمُشْرِكَاتِ وَيَتُوبَ اللَّهُ عَلَى الْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ ۗ وَكَانَ اللَّهُ غَفُورًا رَّحِيمًا ﴿٧٣﴾

(७३) (यो यसकारण) कि अल्लाह (तआ़ला) मिथ्याचारी पुरुष एवं मिथ्याचारी महिलाहरु तथा मूर्तिपूजक पुरुष एवं मूर्तिपूजक महिलाहरुलाई दण्ड देओस् तथा ईमान भएका पुरुष एवं ईमान भएका महिलाहरुको क्षमा-याचना स्वीकार गरोस्,[3]

[1]जब अल्लाह तआ़लाले अवज्ञाकारीहरुको प्रतिफल एवं प्रत्युपकार तथा अवज्ञाकारीहरुका लागि दण्ड एवं यातनाको वर्णन गरिदियो त अब धार्मिक आदेश तथा त्यसको कठिनाईको चर्चा गरिराखेको छ। अमानतबाट ती धार्मिक नियम तथा अनिवार्य तथा आवश्यक कर्म तात्पर्य हुन् जसलाई गर्नाले पुण्य तथा नगर्नाले विमुखतामा यातना हुनेछ। जब यी धार्मिक भार आकाश तथा धर्ती एवं पर्वतहरुमाथि पारिए त उनीहरु तिनलाई उठाउनबाट भयभीत भए, परन्तु जब मनुष्यका समक्ष गरिए त त्यो अल्लाहका आज्ञापालन (अमानत) का बदला एव प्रतिफल तथा महत्वलाई देखेर यस भारलाई उठाउनको लागि तयार भइहाले। धर्मविधानलाई अमानत भनेर यसतर्फ संकेत गरियो कि तिनका अदायगी (तिर्नु) मानिसहरुमाथि त्यसैप्रकार अनिवार्य छ जुनप्रकार अमानतको अदायेगी (भुक्तानी) अनिवार्य हुन्छ। प्रस्तुत गर्नुको अर्थ के हो ? तथा आकाश, धर्ती एवं पर्वतहरुले यसको उत्तर कुन प्रकारले दिए तथा मनुष्यले त्यसलाई कुन समय स्वीकार गऱ्यो ? यसको पूर्ण वृत्तान्त न हामी जान्न सक्छौं न हामी त्यसलाई वर्णन गर्न सक्दछौं। हामीलाई यो पूर्ण विश्वास हुनुपर्छ कि अल्लाहले आफ्नो प्रत्येक सृष्टिमा एउटा विशेष प्रकार को संवेदन एवं प्रबोध राखेको छ यद्यपि हामी यस वास्तविकतासित परिचित छैनौं परन्तु अल्लाह तआ़ला त त्यसलाई बुझ्न सामर्थ्य राख्दछ। उसले अवश्य यस अमानतलाई उनका समक्ष प्रस्तुत गऱ्यो होला जसलाई स्वीकार गर्नबाट उनले इन्कार गरिदिए। यो इन्कार उनले उद्दण्डता तथा विद्रोहको विचारले गरेनन्। बरु त्यसमा यो भय संचित थियो कि यदि यस अमानतका मागहरुलाई पूरा गर्न सकेनौं त हामीलाई कठोर दण्ड भोग्नुपर्नेछ। मनुष्य किनकि उत्ताउलो छ, त्यसले यातना एवं दण्डका पक्षमा अधिक विचार गरेन तथा प्रतिष्ठा प्राप्त गर्नुको अभिलाषामा यस दायित्वलाई स्वीकार गरिहाल्यो।

[2]अर्थात् यस भारलाई उठाएर त्यसले आफूमाथि अत्याचारको कार्य तथा त्यसका माँगहरुसित विमुखता अथवा त्यसका मूल्य एवं सम्मानित बेवास्ता गरेर अज्ञानताको प्रदर्शन गऱ्यो।

[3]यसको सम्बन्ध حَمَلَهَا सित छ अर्थात् मनुष्यलाई यस अमानतको जिम्मेवार बनाउनको उद्देश्य यो हो कि द्वेयवादी तथा मूर्तिपूजकहरुको द्वेयवाद एवं मिश्रणवाद तथा ईमान भएकाहरुको

तथा अल्लाह तआला अत्यन्त क्षमाशील एवं दयालु छ ।

## सूरतु सबा-३४

سُورَةُ سَبَإٍ

सूरः सबा मक्कामा अवतरित भयो यसमा चौवन्न आयत एवं छ रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

الْحَمْدُ لِلَّهِ الَّذِي لَهُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ وَلَهُ الْحَمْدُ فِي الْآخِرَةِ ۚ وَهُوَ الْحَكِيمُ الْخَبِيرُ ①

(१) समस्त प्रशंसाहरु अल्लाहकै लागि योग्य छन् जसका (स्वामित्वमा) ती सबै कुराहरु छन् जो आकाशहरु तथा धर्तीमा छन्[1] तथा आखिरतमा पनि प्रशंसा उसैको लागि छ,[2] त्यो (अत्यन्त) हिक्मतवाला एवं (पूर्ण) सूचना राख्नेवाला छ।

يَعْلَمُ مَا يَلِجُ فِي الْأَرْضِ وَمَا يَخْرُجُ مِنْهَا وَمَا يَنْزِلُ مِنَ السَّمَاءِ وَمَا

(२) जे धर्तीमा जान्छ[3] तथा जे त्यसबाट निस्कन्छ, जे आकाशबाट उत्रन्छ[4] तथा जे उक्लेर त्यसमा

ईमान प्रत्यक्ष हुनजाओस् तथा त्यसपश्चात तद्अनुसार उनीहरुलाई प्रत्युपकार एवं दण्ड प्रदान गरियोस् ।

[1]अर्थात् उसैका स्वामित्व एवं अधिकारमा छन्, उसैको इच्छा तथा निर्णय त्यसमा लागू हुन्छ। मनुष्यलाई जे पनि वरदान प्राप्त हुन्छ उसैको रचना एवं उसैको उपकार हो । यसैकारण आकाश तथा धर्तीको प्रत्येक वस्तुको प्रशंसा वास्तवमा ती उपकारहरुमाथि अल्लाहकै प्रशंसा हो जसबाट उसले आफ्नो सृष्टिलाई सम्मानित गरेको छ ।

[2]यो प्रशंसा प्रलयका दिन ईमान भएकाले गर्नेछन्, जस्तो ﴿الْحَمْدُ لِلَّهِ الَّذِي هَدَانَا لِهَٰذَا﴾ (सूर अल-आराफ़-४३) ﴿الْحَمْدُ لِلَّهِ الَّذِي أَذْهَبَ عَنَّا الْحَزَنَ﴾ (सूर : फ़ातिर-३४) ﴿الْحَمْدُ لِلَّهِ الَّذِي صَدَقَنَا وَعْدَهُ﴾ (अज़्ज़ुमर-७४) इत्यादि आयतहरु। तैपनि संसामा अल्लाहकै स्तुति एवं प्रशंसा इबादत (बन्दना) हो जसको उत्तरदायी मानवलाई बनाइएको छ, तथा आख़िरत (परलोक) मा यो ईमानवालाहरुको आत्मिक आहार हुनेछ, जसबाट उनलाई स्वाद एवं स्फूर्तिको आभास भइरहनेछ, (फ़तहुल क़दीर)

[3]जस्तो वर्षा, कोष, निधि आदि ।

[4]वर्षा, तुषार, गर्जन, विद्युत तथा ईश्वरीय विभूतिहरु आदि, अपितु फरिश्ता एवं आकाशीय ग्रन्थहरुको अवतरण ।

يَعْرُجُ فِيهَا ۚ وَهُوَ الرَّحِيمُ الْغَفُورُ ②

जान्छ[1] त्यो सबैसित सूचित छ । तथा त्यो दयालु अत्यन्त क्षमाशील छ ।

وَقَالَ الَّذِينَ كَفَرُوا لَا تَأْتِينَا السَّاعَةُ ۖ قُلْ بَلَىٰ وَرَبِّي لَتَأْتِيَنَّكُمْ عَالِمِ الْغَيْبِ ۖ لَا يَعْزُبُ عَنْهُ مِثْقَالُ ذَرَّةٍ فِي السَّمَاوَاتِ وَلَا فِي الْأَرْضِ وَلَا أَصْغَرُ مِنْ ذَٰلِكَ وَلَا أَكْبَرُ إِلَّا فِي كِتَابٍ مُبِينٍ ③

(३) तथा काफ़िरहरु भन्छन् कि हामीमाथि केयामत हुनेछैन । तपाईं भनिदिनुस् कि मलाई मेरो प्रभुको सौगन्ध जो परोक्षको ज्ञाता छ कि त्यो नि:सन्देह तिमीमाथि व्याप्त हुनेछ,[2] अल्लाह (तआ़ला) बाट एक कणका समानको वस्तु पनि गुप्त छैन[3] न आकाशहरुमा तथा न धर्तीमा बरु त्यसभन्दा पनि सानो तथा ठूलो सबैकुरा खुल्ला किताबमा अंकित छ ।[4]

لِيَجْزِيَ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ ۚ أُولَٰئِكَ لَهُمْ مَغْفِرَةٌ وَرِزْقٌ كَرِيمٌ ④

(४) ताकि त्यसले ईमान भएका तथा सत्कर्मीहरुलाई राम्रो प्रतिकार प्रदान गरोस्,[5] यिनै मानिस हुन् जसका लागि मोक्ष तथा सम्मानित जीविका छ ।

وَالَّذِينَ سَعَوْ فِي آيَاتِنَا مُعَاجِزِينَ أُولَٰئِكَ

(५) तथा हाम्रा आयतलाई तल पार्नमा जसले प्रयत्न गरेका छन्[6] यी त्यसता मानिसहरु हुन् जसका लागि

[1]फरिश्ताहरु तथा भक्तहरुको कर्म ।

[2]शपथ पनि लिनुभयो तथा शब्द पनि बलको र यसका अतिरिक्त बल (जोड) को लाम अक्षर, अर्थात् केयामत किन आउने छैन ? त्यो त कुनै पनि रुपमा आउनु छ ।

[3]अनुपस्थित एवं गुप्त तथा टाढा होइन अर्थात् जब आकाश तथा धर्तीको कुनै कण त्यसबाट अनुपस्थित तथा लुकेको छैन र फेरि विभिन्न अंशहरुको जुन धुलोमा मिसिसकेका हुनेछन् । एकत्र गरी पुन: तिमीलाई जीवित गरिदिनु किन असंभव हुनेछ ?

[4]अर्थात् लौहे महफ़ूज (सुरक्षित पुस्तक) मा विद्यमान एवं अंकित छ ।

[5]यो प्रलय हुनुको कारण हो । अर्थात् केयामत यसकारण व्याप्त हुनेछ तथा सबै मानिसहरुलाई अल्लाह यसकारण पुन: जीवित गर्नेछ कि उनका पुण्यको प्रतिफल प्रदान गरोस्, किनकि प्रतिकारकै लागि उसले यो दिन राखेको छ । यदि प्रतिकार दिवस नहुँदो हो त त्यसपछि यसको अर्थ यो हुनेछ कि सत्कर्मी तथा पापी समान छन्, र यो कुरो न्यायका अत्यन्त विपरीत छ र भक्तहरु विशेषरुपमा पुनीतहरुमाथि अत्याचार हुनेछ । وما ربك بظلام للعبيد "तिम्रो पालनकर्ताले अलिकति पनि अत्याचार गर्ने छैन ।"

[6]अर्थात् हाम्रा आयतहरुको खण्डन गरे तथा मिथ्या भने जुन हामीले आफ्ना सन्देष्टाहरुमाथि अवतरित गर्यौं । مُعجزيـن यो ठान्दै कि हामी त्यसलाई समात्नबाट विवश हुनेछौं, किनकि

لَهُمْ عَذَابٌ مِّن رِّجْزٍ أَلِيمٌ ⑤

अत्यन्त नराम्रो प्रकारको यातना छ ।

وَيَرَى الَّذِينَ أُوتُوا الْعِلْمَ الَّذِي أُنزِلَ إِلَيْكَ مِن رَّبِّكَ هُوَ الْحَقَّ وَيَهْدِي إِلَىٰ صِرَاطِ الْعَزِيزِ الْحَمِيدِ ⑥

(६) तथा जसलाई ज्ञान छ उनीहरुले देखिहाल्नेछन् कि जे-जति तपाईंतिर तपाईंको प्रभुको तर्फबाट त्यो (साक्षात) सत्य छ,[१] तथा अल्लाह प्रभावशाली प्रशंसावालाका मार्गको मार्गदर्शन गर्दछ ।[२]

وَقَالَ الَّذِينَ كَفَرُوا هَلْ نَدُلُّكُمْ عَلَىٰ رَجُلٍ يُنَبِّئُكُمْ إِذَا مُزِّقْتُمْ كُلَّ مُمَزَّقٍ إِنَّكُمْ لَفِي خَلْقٍ جَدِيدٍ ⑦

(७) तथा काफ़िरहरुले भने,[३] आउ, हामी तिमीलाई एउटा यस्तो व्यक्तिबारे भनौं[४] जो तिमीलाई यी सूचना पठाइराखेको छ[५] कि जब तिमी पूर्णरुपमा कण-कण भइहाल्नेछौ त तिमी पुन: एउटा नयाँ जीवनमा आउनेछौ ।[६]

उनीहरुको विश्वास थियो कि मरे पश्चात जब हामी माटोमा मिसिहाल्नेछौं त हामी कुन प्रकार पुन: जीवित भई कसैका अगाडी आफ्ना क्रियाकलापका उत्तरदायी हुनेछौं ? उनको यो विचार मानूँ यो कुराको घोषणा थियो कि अल्लाह हामीलाई समात्न सामर्थ्यवान नै हुनेछैन, यसकारण प्रलयको भय हामीलाई समाप्न सामर्थ्यवान नै हुनेछैन, यसकारण प्रलयको भय हामीलाई किन हुनुपर्‍यो ?

[१]यहाँ देख्नुबाट तात्पर्य हृदयले देख्नु अर्थात् निश्चित ज्ञान हो, मात्र आँखाले देख्नु होइन । ज्ञानीहरुबाट तात्पर्य सहाबा (नबीका सहचर) अथवा अन्य ग्रन्थवाला ईमान्दार अथवा सबै मुसलमान हुन्, अर्थात् ईमानवाला यस कुरालाई जान्दछन् एवं जसमा विश्वास गर्दछन् ।

[२]यो "हक" (सत्य) को संयोजक हो, अर्थात् उनी यो पनि जान्दछन् कि यो पवित्र कुर्आन त्यस मार्गतिर मार्ग दर्शाउँछ जो त्यस अल्लाहको मार्ग हो जो विश्वासमा सबैमाथि प्रभावशाली तथा आफ्नो सृष्टिमा प्रशंसनीय छ तथा त्यो मार्ग के हो ? एकेश्वरवादका मार्ग जसतिर सबै ईशदूत आ-आफ्ना समुदायलाई बोलाउँदै रहे ।

[३]यो ईमानवालाको प्रति आख़िरत (परलोक) का इन्कार गर्नेहरुको कथन हो जो उनीहरुले परस्पर एक-अर्कासित भने ।

[४]यसबाट तात्पर्य आदरणीय मुहम्मद मुस्तफा (सल्लल्लाहु अलैहि वसल्लम) हुन् जो उनीतिर अल्लाहका नबी बनेर आए ।

[५]अर्थात् विचित्र सूचना दुर्बोध सूचना ।

[६]अर्थात् मरे पश्चात जब तिमी माटोमा मिसिएर कण-कण भइहाल्नेछौ, तिम्रो प्रत्यक्ष अस्तित्व समाप्त भइहाल्नेछ । तिमीलाई समाधिहरु (चिहानहरु) बाट पुन: जीवित गरिनेछ ।

أَفْتَرَىٰ عَلَى ٱللَّهِ كَذِبًا أَم بِهِۦ جِنَّةٌۢ ۗ بَلِ ٱلَّذِينَ لَا يُؤْمِنُونَ بِٱلْءَاخِرَةِ فِى ٱلْعَذَابِ وَٱلضَّلَٰلِ ٱلْبَعِيدِ ⑧

(८) (हामी भन्दैनौं) कि स्वयं उसले नै अल्लाहमाथि मिथ्या रचेको छ अथवा त्यसलाई उन्माद भएको छ[1] बरु (वास्तविकता यो हो) कि आख़िरतमा विश्वास नगर्ने नै यातनामा तथा दूरका विचलनमा छन् ।[2]

أَفَلَمْ يَرَوْا۟ إِلَىٰ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُم مِّنَ ٱلسَّمَآءِ وَٱلْأَرْضِ ۚ إِن نَّشَأْ نَخْسِفْ بِهِمُ ٱلْأَرْضَ أَوْ نُسْقِطْ عَلَيْهِمْ كِسَفًا مِّنَ ٱلسَّمَآءِ ۚ

(९) त के उनीहरु आफ्ना अगाडी-पछाडी आकाश तथा धर्तीलाई देखिराखेका छैनन ?[3] यदि हामी चाहन्छौं भने उनीहरुलाई धर्तीमा धँसाइदिन्छौं अथवा उनीमाथि आकाशका टुक्रा खसालदिन्छौं,[4] निश्चय

तथा पुनः त्यही रुपरेखा तिमीलाई प्रदान गरिनेछ जसमा तिमी पहिला थियौ । यो वार्तालाप उनीहरुले परस्पर उपहासमा गरे ।

[1]अर्थात् दुईटा कुरामा एउटा त अवश्य छ कि यो मिथ्यालाप गरिराखेको छ तथा अल्लाहको तर्फबाट प्रकाशना (वह्य) एवं दुतत्व (रिसालत) को दावी, यो उसको अल्लाहमाथि मिथ्यारोपण हो, अथवा उसको बुद्धि बिग्रेको छ तथा उन्मादमा यस्ता क़ुरा गरिराखेका छन् जो अनुचित छन् ।

[2]अल्लाहले भन्नुभयो, कुरा यस्तो होइन जुनप्रकार यिनीहरु सोचिराखेका छन्, बरु तथ्य यो हो कि समभ्ह-बुभ्ह एवं वास्तविकताका ज्ञानबाट विवश छन् जसका कारण यिनी परलोकमा विश्वास (ईमान) स्थापित गर्नाको साटो त्यसलाई नकारिराखेका छन्, जसको परिणाम परलोकको स्थाई यातना छ तथा यिनी आज विचलनमा लिप्त छन्, जो सत्यबाट अति टाढा छ ।

[3]अर्थात् यसमा विचार गर्दैनन् ? अल्लाह उनलाई हप्काउँदै भनिराखेको छ कि आख़िरतको यो इन्कार आकाश तथा धर्तीको रचनामा चिन्तन नगर्नुको परिणाम हो, अन्यथा जो शक्ति आकाश जस्तो वस्तु, जसको उँचाई तथा विस्तार अवर्णनीय छ तथा धर्तीजस्तो वस्तु जसको लम्बाइ एवं चौडाइ दुर्बोध छ, सृष्टि गर्नसक्छ त्यसका लागि आफ्नै रचित वस्तुको पुनः रचना तथा त्यसलाई पुनः त्यसै स्थितिमा ल्याउनु जसमा पहिला थियो, किन असम्भव छ ?

[4]अर्थात् यो आयत दुईटा कुराहरुमा आधारित छ, एउटा अल्लाहका गुण सामर्थ्यको चर्चामा जसको अघि वर्णन भयो । दोस्रो कुफ्फ़ारका लागि चेतावनी तथा धम्कीमा कि जो अल्लाह आकाश एवं धर्तीको रचनामा यसप्रकार सामर्थ्यवान छ कि उनीमथि उनका बीच प्रत्येक वस्तुमाथि उसको अधिकार एवं प्रभुत्व छ, त्यो जब चाहन्छ उनीमाथि आफ्नो प्रकोप पठाएर उनलाई नष्ट गर्न सक्दछ । धर्तीमा धँसाएर पनि जस्तै कारुनलाई धँसायो अथवा आकाशका खण्ड खसालेर जस्तै "ऐकावाला"लाई नष्ट गरिदियो ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً لِّكُلِّ عَبْدٍ مُّنِيبٍ ﴿٩﴾

यसमा पूरा प्रमाण छ प्रत्येक त्यस भक्तका लागि जो (हृदयदेखि) ध्यानमँग्न छ ।

وَلَقَدْ آتَيْنَا دَاوُودَ مِنَّا فَضْلًا ۖ يَا جِبَالُ أَوِّبِي مَعَهُ وَالطَّيْرَ ۖ وَأَلَنَّا لَهُ الْحَدِيدَ ﴿١٠﴾

(१०) तथा हामीले दाऊदमाथि आफ्नो कृपा गऱ्यौं,[१] हे पर्वतहरु त्यसका साथ सरुचि महिमागान गर्नेगर तथा पंक्षीहरुलाई पनि[२] (यो आदेश छ) तथा हामीले उसका लागि फलामलाई कोमल गरिदियौं ।[३]

أَنِ اعْمَلْ سَابِغَاتٍ وَقَدِّرْ فِي السَّرْدِ ۖ وَاعْمَلُوا صَالِحًا ۖ إِنِّي بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿١١﴾

(११) कि तिमी पूरा-पूरा कवचहरु बनाउ[४] तथा जोडहरुमा अनुमति राख[५] तथा तिमी सबै पुण्यका कार्य गर,[६] (विश्वास गर) म तिम्रा कर्मलाई देखिराखेको छु ।

[१]अर्थात् नबूअतका साथ राज्य एवं अन्य कैयन् विशेष गुणहरुबाट सम्मानित गऱ्यौं।

[२]तिनीहरुमा एउटा मधुर स्वरको वरदान थियो, जब उनी अल्लाहको पवित्रताको वर्णन गर्दथे त पत्थरका ठोस पर्वत पनि तस्बीह पढ्न (अल्लाहको पवित्रताको ज्ञान) मा लाग्दथे । उडिराखेका पंक्षी रोकिन्थे तथा गान गर्न थाल्थे أَوِّبِي (अव्वेबी) को अर्थ हो पवित्रता गान दोहोऱ्याउ, अर्थात् हामीले पर्वत एवं पंक्षीहरुलाई भन्यौं, अत: यिनी पनि दाऊदका साथ पवित्रता गान (तस्बीह) मा लीन हुन्थे والطير को संयोजक يا جبال को स्थानमा छ, किनकि جبال वास्तवमा कर्मकारक 'अ' अक्षर को मात्राका साथ लोप छ । मूल वाक्य यसप्रकार छ نادينا الجبال والطير (हामीले पर्वत तथा पंक्षीहरुलाई पुकाऱ्यौं)अथवा यसको संयोजक فضلا हो तथा अर्थ यो हुनेछ कि हामीले पंक्षीहरुलाई उनका अधीन गरिदियौं । (फ़तहुल क़दीर)

[३]अर्थात् फलामलाई अग्निमा तताइ तथा हथौडाले नथिची त्यसलाई मोम, मुक्षिएको पिठो, तथा गिलो माटोको समान चाहे अनुसार मोडिन्थ्यो, बटारिन्थ्यो तथा इच्छा अनुसार जे पनि बनाउन सकिन्थ्यो ।

[४]سابغات लुप्त विशेष्यको विशेषण हो अर्थात् पूरा लामा कवचहरु जो योद्धाका शरीरलाई उचितप्रकारले ढाक्न सकून् तथा त्यसलाई शत्रुहरुका आघातबाट सुरक्षित राखून् ।

[५]ताकि सानो-ठूलो नहुनु, अथवा साह्रो अथवा नरम नहुनु, अर्थात् कडीहरुलाई जोड्नमा कील यति सूक्ष्म नहोऊन् कि जोड हल्लिरहून् तथा तिनमा स्थिरता एवं दृढता नआओस् र न यति मोटा होऊन् कि त्यसलाई भाँचिहालून् अथवा कडी साँगुरो हुनजाओस् तथा त्यसलाई लगाउन नसकियोस्, यो कवच बनाउनुको उद्योगका विषयमा आदरणीय दाऊदलाई निर्देश दिइए ।

[६]अर्थात् यी वरदानहरुका साटोमा सत्कर्महरुको प्रयोजन गर ताकि मेरो व्यवहारिक कृतज्ञता पनि व्यक्त भइराखोस् । यसबाट विदित भयो कि जसलाई अल्लाह सांसारिक उपकारहरुबाट सुशोभित गर्दछ त्यसले त्यसै अनुपातमा

وَلِسُلَيْمٰنَ الرِّيْحَ غُدُوُّهَا شَهْرٌ وَّرَوَاحُهَا شَهْرٌ ۚ وَاَسَلْنَا لَهٗ عَيْنَ الْقِطْرِ ۗ وَمِنَ الْجِنِّ مَنْ يَّعْمَلُ بَيْنَ يَدَيْهِ بِاِذْنِ رَبِّهٖ ۗ وَمَنْ يَّزِغْ مِنْهُمْ عَنْ اَمْرِنَا نُذِقْهُ مِنْ عَذَابِ السَّعِيْرِ ﴿١٢﴾

(१२) तथा हामीले सुलैमानका लागि वायुलाई (वशमा गरिदियौं) कि प्रात:का गन्तव्य स्थान उसको एक महिनाको हुन्थ्यो तथा सन्ध्याको गन्तव्य स्थान पनि,[1] तथा हामीले उनका लागि ताँबाका स्रोत प्रवाहित गरिदियौं,[2] तथा उसका प्रभुका आदेशबाट केही जिन्नात पनि उसका अधीन उसका समक्ष कार्य गर्दथे, तथा उनीहरुमध्ये जो पनि हाम्रा आदेशहरुको अवहेलना गरे हामीले त्यसलाई प्रज्वलित आगोको यातनाको स्वाद चखाउनेछौं ।[3]

يَعْمَلُوْنَ لَهٗ مَا يَشَآءُ مِنْ مَّحَارِيْبَ وَتَمَاثِيْلَ وَجِفَانٍ كَالْجَوَابِ وَقُدُوْرٍ رّٰسِيٰتٍ ۗ اِعْمَلُوْٓا اٰلَ دَاوٗدَ شُكْرًا ۗ

(१३) जे-जति सुलैमान चाहन्थे ती (जिन्नात) तयार गरिदिन्थे, जस्तो दुर्ग, चित्र (स्मारक), तालाबका समान लगन (ठूला ट्याङ्की) तथा चूल्होमा स्थापित सुदृढ डेगहरु (ठूला भाँडा) दिनेछन् ।[4] हे

त्यसको कृतज्ञता पनि व्यक्त गर्नुपर्दछ तथा कृतज्ञतामा मूल वस्तु यही हो कि उपकार गर्नेलाई प्रसन्न राख्न भरमकदूर प्रयत्न गरियोस् अर्थात् त्यसको आज्ञापालन गरियोस्, तथा अवज्ञाबाट पन्छियोस् ।

[1]अर्थात् आदरणीय सुलैमान राज्यका प्रमुखहरु एवं सेनासहित सिंहासनमा आसीन हुन्थे र जहाँ उनका आदेश हुन्थे वायु त्यसलाई यति तीव्र गतिले लैजान्थ्यो कि एक महिनाको दूरी प्रात: देखि साँझसम्म तथा यसैप्रकार एक महीनाको दूरी साँझदेखि रातसम्म पूरा हुन्थ्यो । यसैप्रकार एक दिनमा दुई महिनाको यात्रा पूरा हुन्थ्यो ।

[2]अर्थात् हामीले जस्तो दाऊदका लागि फलाम नरम गरिदिएका थियौं आदरणीय सुलैमानका लागि ताँबाको स्रोत प्रवाहित गर्‍यौं ताकि ताँबाको धातुबाट जे चाहन्छन् बनाऊन् ।

[3]अधिकतर भाष्यकारहरुका विचारमा यो यातना प्रलयका दिन दिइने छ परन्तु केही ज्ञानीहरुका समीप यो सांसारिक दण्ड हो । उनीहरु भन्दछन् कि अल्लाहले एउटा फरिश्ता नियुक्त गरेको थियो जसका हातमा अग्निको लट्ठी हुने गर्दथ्यो । जो जिन्न आदरणीय सुलैमानको आदेशबाट विमुखता गर्दथ्यो फरिश्ताले त्यो लट्ठी उसलाई हान्थ्यो जसबाट त्यो जलेर भष्म हुन्थ्यो । (फ़तहुल क़दीर)

[4] مَحَارِيْبُ बहुवचन हो مِحْرَابٌ को, उच्च स्थान अथवा सुन्दर भवन । अभिप्राय यो हो, उच्च भवन, भव्य गृह अथवा मस्जिदहरु तथा पूजागृह تَمَاثِيْل बहुवचन हो تِمْثَال को, अर्थात् चित्र यी चित्र निर्जीव कुराका हुने गर्थे । केही विद्वान भन्दछन् कि सन्देष्टा एवं धर्मात्माहरुका चित्र मस्जिदहरुमा बनाइन्थे ताकि उनलाई देखेर

وَقَلِيْلٌ مِّنْ عِبَادِىَ الشَّكُوْرُ ﴿١٣﴾

दाऊदको सन्तान ! त्यसको कृतज्ञता व्यक्त गर्नका लागि सत्कर्म गर, मेरा भक्तहरुमध्ये कृतज्ञ भक्त कमै हुन्छन् ।

فَلَمَّا قَضَيْنَا عَلَيْهِ الْمَوْتَ مَا دَلَّهُمْ عَلٰى مَوْتِهٖٓ اِلَّا دَآبَّةُ الْاَرْضِ تَاْكُلُ مِنْسَاَتَهٗ ۚ فَلَمَّا خَرَّ تَبَيَّنَتِ الْجِنُّ اَنْ لَّوْ كَانُوْا يَعْلَمُوْنَ الْغَيْبَ مَا لَبِثُوْا فِى الْعَذَابِ الْمُهِيْنِ ﴿١٤﴾

(१४) अनि जब हामीले उनीमाथि मरणको आदेश पठाइदियौं त तिनको सूचना (जिन्नातलाई) घुनका कीराबाहेक जो उनको काठलाई खाइराखेको थियो, कसैले दिएन । त जब (सुलैमान) लडे त्यसबखत जिन्नहरुले जानीहाले कि यदि उनी परोक्षको ज्ञान राख्ने भए त यस अपमानका प्रकोपमा फँसिरहँदैनथे ।[1]

لَقَدْ كَانَ لِسَبَاٍ فِىْ مَسْكَنِهِمْ اٰيَةٌ ۚ

(१५) सबाका समुदायका लागि आफ्ना वस्तीहरुमा (अल्लाहका सामर्थ्यको) निशानी थियो,[2]

मानिसहरु पनि इबादत (बन्दना) गरून् । यो अर्थ त्यस स्थितिमा सही छ जब यो मानियोस् कि आदरणीय सुलैमानको धर्मविधानमा चित्रकारीको अनुमति थियो, जुन सही छैन । तैपनि इस्लाममा त अति कडाईका साथ यसको निषेध गरिएको छ । جفان बहुवचन हो جَفْنَة को अर्थात् लगन جَواب बहुवचन हो جابية को, जलाशय जसमा जल एकत्रित गरिन्छ, अर्थात् जलाशय जत्रा ठूला-ठूला लगन, قدور दिनेछन्, راسيات स्थिर भनिन्छ कि यी दिनेछन् पर्वत काटेर बनाइन्थे जसलाई यताउता लग्न सकिन्नथ्यो । यसमा एकै समयमा हजारौं व्यक्तिहरुको खाना पाक्दथ्यो । यी सबै कार्य जिन्नात गर्दथे ।

[1]आदरणीय सुलैमानका युगमा जिन्नातका सन्दर्भमा यो प्रसिद्ध भइसकेको थियो कि यिनी परोक्षका कुरा जान्दछन् । अल्लाहले माननीय सुलैमानका निधनद्वारा यस भ्रमको त्रुटिलाई प्रकट गरिदियो ।

[2]सबा त्यही समुदाय हो जुन सबाकि रानी विख्यात छ, जो माननीय सुलैमानका युगमा मुसलमान भइहालेकी थिई । समुदायकै नाममा देशको नाम पनि सबा थियो, यस समय यो क्षेत्र यमनका नामले प्रसिद्ध छ । यो बडो सम्पन्न देश थियो, यो देश थलीय तथा समुद्री व्यवसायमा पनि प्रमुख थियो तथा कृषि एवं उद्यानमा प्रसिद्ध । यी दुबै वस्तुहरु कुनै देश एवं समुदायको सम्पन्नताका कारण हुन्छन् । यसै धन-सम्पत्तिका प्रचुरतालाई यहाँ अल्लाहका सामर्थ्यको लक्षण भनिएको छ ।

جَنَّتٰنِ عَنْ يَّمِيْنٍ وَّشِمَالٍ ۬ كُلُوْا مِنْ رِّزْقِ رَبِّكُمْ وَاشْكُرُوْا لَهٗ ؕ بَلْدَةٌ طَيِّبَةٌ وَّرَبٌّ غَفُوْرٌ ﴿۱۵﴾

उनका दायाँ-बायाँ दुई बगैंचा थिए ।[1] (हामीले उनलाई आदेश दिएका थियौं कि) आफ्ना प्रभुबाट प्रदान गरिएका जीविका खाउ[2] तथा त्यसको कृतज्ञता व्यक्त गर[3] यो स्वच्छ नगर[4] तथा क्षमाशील प्रभु पनि ।[5]

فَاَعْرَضُوْا فَاَرْسَلْنَا عَلَيْهِمْ سَيْلَ الْعَرِمِ وَبَدَّلْنٰهُمْ بِجَنَّتَيْهِمْ جَنَّتَيْنِ ذَوَاتَيْ اُكُلٍ خَمْطٍ وَّاَثْلٍ وَّشَيْءٍ مِّنْ سِدْرٍ قَلِيْلٍ ﴿۱۶﴾

(१६) परन्तु उनीहरुले मुख फर्काए त हामीले उनीमाथि तीब्र बाढीको (पानी) पठाइदियौं तथा उनका (हरा-भरा) बगैंचाहरुको साटो दुईटा (यस्ता) बगैंचा दियौं जो स्वादमा तिता-टर्रा तथा अधिकतर भार एवं केही बयरका वृक्षहरु भएका थिए ।[6]

[1]भनिन्छ कि नगरका दुबैतिर पर्वत थिए जसमा स्रोतहरुका जल प्रवाहित भई नगरमा आउँथ्यो । उनका शासकहरुले पर्वतहरुका बीच डीलहरु बनाउन लगाए तथा उनका साथ उद्यान लगाइए जसबाट जलको दिशा पनि निर्धारित भयो तथा बगैंचाहरुको सिंचाइको एउटा प्राकृतिक साधन सुलभ भयो तथा बगैंचाहरुलाई दायाँ-बायाँ दुईटा बगैंचा भनिएको छ । केही ज्ञानीहरुको विचार छ कि جَنَّتَيْن बाट दुईटा बगैंचा होइन बरु दायाँ-बायाँका दुईटा दिशाहरु अभिप्राय हुन् तथा अभिप्राय बगैंचाहरुको अधिकता हो कि जता दृष्टि गयो, बाग़, हरियाली एवं ताजगी नै देखिन्थ्यो । (फ़तहुल क़दीर)

[2]यो उनका पैग़म्बरहरु (सन्देष्टाहरु) द्वारा भन्न लगाइयो अथवा अभिप्राय ती उपहारहरुको वर्णन हो जसबाट उनीहरुलाई सम्मानित गरिएको थियो ।

[3]परोपकारी तथा दयावानको आज्ञापालन गर तथा त्यसको अवज्ञाबाट बच ।

[4]अर्थात् बगैंचाहरुको अधिकता एवं फलहरुको प्रचुरताका कारण यो नगर उत्तम छ । भनिन्छ कि वातावरणका स्वच्छताका कारण यो नगर भिंगा, लामखुट्टे एवं यसप्रकारका दुखदायी जन्तुहरुबाट पनि पवित्र थियो । والله أعلم

[5]अर्थात् यदि तिमी पालनकर्ताको कृतज्ञता व्यक्त गर्दै रहनेछौ भने त्यसले तिम्रा पाप पनि क्षमा गरिदिनेछ । यसको भावार्थ यो भयो कि यदि मनुष्य क्षमा-याचना गरिराख्छन् भने पाप सर्वविनाश तथा पुरस्कारहरु खोसिनुका कारण पनि बन्दैनन् बरु अल्लाह क्षमाबाट काम लिन्छ ।

[6]अर्थात् उनीहरुले पर्वतहरुका बीच डीलहरु तथा बाँध निर्माण गरी पानीलाई जो रोकेका थिए र त्यसलाई कृषि तथा उद्यानका काममा ल्याउँथे, हामीले तीब्र जल प्लावनद्वारा ती बाँध तथा डीलहरुलाई भत्काइदियौं तथा हरिया एवं फलदार

ذٰلِكَ جَزَيْنٰهُمْ بِمَا كَفَرُوْا ۭ وَهَلْ نُجٰزِيْٓ اِلَّا الْكَفُوْرَ ۝17

(१७) हामीले उनको कृतघ्नताको यो पुरस्कार उनीहरुलाई दियौं, हामी (यस्ता कडा) दण्ड ठूला-ठूला कृतघ्नहरुलाई नै दिन्छौं ।

وَجَعَلْنَا بَيْنَهُمْ وَبَيْنَ الْقُرَى الَّتِيْ بٰرَكْنَا فِيْهَا قُرًى ظَاهِرَةً وَّقَدَّرْنَا فِيْهَا السَّيْرَ ۭ سِيْرُوْا فِيْهَا لَيَالِيَ وَاَيَّامًا اٰمِنِيْنَ ۝18

(१८) तथा हामीले उनका तथा ती वस्तीहरुमध्ये जसले हामीले विभुति (सुख-सुविधा) प्रदान गरेका थियौं वस्तीहरु अन्य राखेका थियौं जो मार्गमा देखिन्थ[1] तथा तिनीहरुमा हिंड्नुका स्थान निर्धारित गरिदिएका थियौं,[2] उनीहरुमा राति तथा दिनहरुमा शान्ति-सुरक्षाका साथ हिंड्डुल गरिराख ।[3]

---

बगैंचाहरुलाई यस्ता बगैंचाहरुमा परिवर्तन गरिदियौं जसमा मात्र प्राकृतिक झाडी हुन्छन्, जसमा प्रथम त कुनै फल लाग्दैन र कुनैमा लाग्छ पनि त अति तितो, टर्रो, कटुस्वाद जसलाई कोही खान सक्दैन । हो, केही बयरहरुका वृक्ष थिए, जसमा पनि काँडा अधिक तथा बयर कम थिए । عَرِمٌ बहुवचन हो عَرِمَةٌ को, पुशता अथवा बाँध अर्थात् यति तीब्र पानी पठायौं जसले बाँधमा दरार पारिदियो र पानी नगरमा पनि आयो जसबाट उनका घर जलमँग्न भए तथा बगैंचाहरुलाई पनि उजाडेर नाश गरिदिए । यो बाँध "सद्दे मआरिब" को नामले प्रसिद्ध छ ।

[1]विभूतिहरु भएका वस्तीबाट तात्पर्य शाम (सीरिया) का वस्तीहरु हुन् । अर्थात् हामीले सबा देश (यमन) तथा शामका मध्ये सडकका किनारमा वस्तीहरु आवाद गरेका थिए । केही विद्वानहरुले ظَاهِرَةً का अर्थ مُتَوَاصِلَةً परस्पर मिलेको एवं निरन्तर गरेका छन् । भाष्यकारहरुले यी वस्तीहरुका संख्या चार हजार सात सय भनेका छन् । यो उनको व्यवसायिक मार्ग थियो जुन निरन्तर आवाद थियो, जसका कारण एक त उनका खानपान तथा विश्रामका लागि मार्ग-व्यय लिनुको आवश्यकता थिएन । अर्को कुरो, निर्जन हुनुको कारण जुन लुटमार तथा हत्याको भय हुन्छ, त्यो हुँदैनथ्यो ।

[2]अर्थात् एक आवादीबाट अर्को आवादीको दूरी निश्चित एवं ज्ञात थियो र त्यसका हिसावले उनी सरलताले आफ्नो यात्रा पूरा गर्दथे । जस्तै प्रातः यात्रा आरम्भ गर्दथे तथा अपरान्हसम्म कुनै आवादी एवं गाउँमा पुग्दथे, त्यहाँ खान-पान गरी विश्राम गर्दथे तथा त्यस पश्चात यात्रा आरम्भ गर्दथे त राति कुनै आवादीमा पुग्दथे ।

[3]यो प्रत्येक भयबाट सुरक्षित तथा मार्ग-व्ययका भारबाट निश्चित हुनुको वर्णन हो कि रात-दिन जुन समयमा तिमी यात्रा गर्न चाहन्छौ गर, न ज्यान एवं धनको भय, न मार्ग-व्यय साथ लिनुको आवश्यकता ।

فَقَالُوْا رَبَّنَا بٰعِدْ بَيْنَ اَسْفَارِنَا وَظَلَمُوْٓا اَنْفُسَهُمْ فَجَعَلْنٰهُمْ اَحَادِيْثَ وَمَزَّقْنٰهُمْ كُلَّ مُمَزَّقٍ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّكُلِّ صَبَّارٍ شَكُوْرٍ ⑲

(१९) परन्तु उनीहरुले पुन: प्रार्थना गरे कि हे हाम्रा प्रभु ! हाम्रा यात्राहरु टाढासम्म गरिदेउ,[१] र किनकि स्वयं उनीहरुले आफ्ना हातबाट आफूलाई नराम्रा गरे । यसकारण हामीले उनीहरुलाई (प्राचीन) कथाहरुका रुपमा गरिदियौं[२] तथा उनलाई टुक्रा-टुक्रा पारिदियौं,[३] नि:सन्देह प्रत्येक धैर्य एवं कृतज्ञता व्यक्त गर्नेका लागि यस (घटना) मा धेरै शिक्षाहरु छन् ।

وَلَقَدْ صَدَّقَ عَلَيْهِمْ اِبْلِيْسُ ظَنَّهٗ فَاتَّبَعُوْهُ اِلَّا فَرِيْقًا مِّنَ الْمُؤْمِنِيْنَ ⑳

(२०) तथा शैतानले उनका विषयमा आफ्नो विचार (अनुमान) सत्य गरी देखायो, यी मानिसहरु (सबै) त्यसका अनुयायी बनिहाले ईमान भएका एउटा गुटका अतिरिक्त ।

وَمَا كَانَ لَهٗ عَلَيْهِمْ مِّنْ سُلْطٰنٍ اِلَّا لِنَعْلَمَ مَنْ يُّؤْمِنُ بِالْاٰخِرَةِ مِمَّنْ هُوَ مِنْهَا فِيْ شَكٍّ ؕ وَرَبُّكَ

(२१) तथा शैतानको उनीमाथि कुनै दबाब (एवं बल) थिएन परन्तु यसकारण कि हामीले ती मानिसहरुलाई जो आखिरतमा विश्वास (ईमान) राख्दछन् ती मानिसहरुमा (उत्तम प्रकारले) प्रकट गरिदेऊन

[१]अर्थात् जुनप्रकार यात्राको कष्ट एवं जोखिम तथा ऋतुको उग्रताको चर्चा गर्दछन् हाम्रा यात्रा पनि त्यसैप्रकार टाढा-टाढा गरिदेउ, निरन्तर आवादीहरुको साटो मध्येबाट सुनसान निर्जन वन तथा जङ्गलहरुबाट हामीलाई गुज्रन परोस् । गर्मीहरुमा घामको तीव्रता तथा जाडो याममा चिसो हावाले हामीलाई व्याकुल गरून् तथा मौसमको उग्रताबाट बच्नका लागि हामीलाई मार्ग-व्ययको पनि व्यवस्था गर्न परोस् । उनको यो प्रार्थना त्यसैप्रकारको हो जस्तो इस्राईलीहरुले 'मन्न' तथा 'सलवा' एवं अन्य सुविधाहरुको विपरीत दाल, तरकारीहरु आदिको माँग गरेका थिए अथवा पुन: उनको स्थितिबाट विदित भइराखेको थियो कि उनको यो प्रार्थना हो ।

[२]अर्थात् यिनलाई यसप्रकार उन्मूल गरियो कि यिनको विनाशको कथा चर्चित भयो र बैठक एवं सभाहरुमा पनि चर्चाको विषय बन्यो ।

[३]अर्थात् उनीहरुलाई विभाजित एवं छिन्न-भिन्न गरियो, जस्तो कि सभाका प्रसिद्ध जातिहरु विभिन्न स्थानहरुमा गई आबाद भए, कोही यसबिर तथा मक्का आए कोही सीरियाका क्षेत्रहरुमा गए, कोही कतै, कोही कतै ।

عَلٰى كُلِّ شَیْءٍ حَفِیْظٌ ﴿۲۱﴾

जो त्यसप्रति शंकामा छन् । तथा तपाईंको प्रभु प्रत्येक वस्तुको रक्षक छ ।

قُلِ ادْعُوا الَّذِیْنَ زَعَمْتُمْ مِّنْ دُوْنِ اللّٰهِ ۚ لَا یَمْلِكُوْنَ مِثْقَالَ ذَرَّةٍ فِی السَّمٰوٰتِ وَلَا فِی الْاَرْضِ وَمَا لَهُمْ فِیْهِمَا مِنْ شِرْكٍ وَّمَا لَهٗ مِنْهُمْ مِّنْ ظَهِیْرٍ ﴿۲۲﴾

(२२) भनिदिनुस् कि अल्लाहका अतिरिक्त ज-जसको तिमीलाई भ्रम छ (सबैलाई) पुकारीहाल,[१] न उनीहरुमध्ये कसैलाई आकाशहरु तथा धर्तीमा एक कणको अधिकार छ,[२] न उनीहरुको तिनीहरुमा कुनै भाग छ[३] तथा न उनीहरुमध्ये कोही अल्लाहको सहयोगी छ ।[४]

وَلَا تَنْفَعُ الشَّفَاعَةُ عِنْدَهٗۤ اِلَّا لِمَنْ اَذِنَ لَهٗ ؕ حَتّٰۤى اِذَا فُزِّعَ عَنْ

(२३) तथा सिफारिश (को प्रार्थना) पनि उसका समक्ष कुनै लाभ दिँदैन तिमीहरुका बाहेक जसका लागि आज्ञा होस् ।[५] यहाँसम्मकि

[१]अर्थात् पूज्य हुनुको, यहाँ زعمتم का दुईटा कर्म लुप्त छन्, زعمتموهم آلهة अर्थात् ज-जसलाई तिमी पूज्य ठानिराखेका छौ ।

[२]अर्थात् न उनीहरुलाई भलाईमा कुनै अधिकार छ न नराम्रो कुरामा, न कसैलाई लाभ पुऱ्याउने सामर्थ्य छ न क्षतिबाट बचाउन, आकाश एवं धर्तीको चर्चा सामान्यताका लागि छ, किनकि सबै वाह्य वस्तुहरुका लागि यिनै स्थान हुन् ।

[३]न उत्पत्तिमा, न स्वामित्वमा तथा न अधिकारमा ।

[४]जो कुनै विषयमा अल्लाहको सहायता गरिराखेको होस्, अपितु अल्लाह अन्यका साझेदारी बिना सबै अधिकारहरुको स्वामी हो तथा कसैको सहायता बिना नै सबै काम गर्दछ ।

[५]"जसलाई आज्ञा प्राप्त होस्' को अभिप्राय छ, सन्देष्टा तथा फरिश्ताहरु आदि, अर्थात् यिनै सिफारिश गर्नेछन्, कोही अन्य होइन, यसकारण कि अरु कसैको सिफारिश लाभप्रद हुनेछैन न उनीहरुलाई अनुमति नै हुनेछ । दोस्रो अभिप्राय हो, सिफारिशका पात्र, अर्थात् सन्देष्टाहरु, फरिश्ताहरु तथा पुण्य आत्माहरुको सिफारिशका उनीहरुका लागि हुनेछन् जो सिफारिशका पात्र हुनेछन् किनकि अल्लाहको तर्फबाट उनैलाई सिफारिश गर्ने अनुमति हुनेछ, कुनै अन्यका लागि होइन । (फ़तहुल क़दीर) अभिप्राय यो भयो कि सन्देष्टाहरु, फरिश्ताहरु तथा सदाचारीहरुका बाहेक कसैले सिफारिश गर्नसक्ने छैन, तथा यो पनि ईमान भएकाले पापीहरुका लागि नै गर्नसक्ने छन्, अधर्मी (काफ़िर) मुशरिक (अनेकेश्वरवादी) तथा अल्लाहका विद्रोहीहरुका लागि होइन । पवित्र ईशवाणी कुरआनले यी दुवै बिन्दुहरुको स्पष्टीकरण अर्को स्थानमा

قُلُوبِهِمْ قَالُوا مَاذَا قَالَ رَبُّكُمْ ۖ قَالُوا الْحَقَّ ۖ وَهُوَ الْعَلِيُّ الْكَبِيرُ ﴿٢٣﴾

जब उनका हृदयहरुबाट घबराहट समाप्त गरिन्छ त सोध्छन् तिम्रा प्रभुले के भने ? उत्तर दिन्छन् कि सत्य भन्यो[1] तथा त्यो अत्यन्त सर्वोच्च एवं अत्यन्त महान छन् ।

قُلْ مَن يَرْزُقُكُم مِّنَ السَّمَاوَاتِ وَالْأَرْضِ ۖ قُلِ اللَّهُ ۖ وَإِنَّا أَوْ إِيَّاكُمْ لَعَلَىٰ هُدًى أَوْ فِي ضَلَالٍ مُّبِينٍ ﴿٢٤﴾

(२४) सोध्नुस् कि तिमीलाई आकाशहरु तथा धर्तीबाट जीविका कसले पुऱ्याउँछ ? (स्वयं) उत्तर दिनुस् कि अल्लाह (महान) । (सुन), हामी अथवा तिमी या त अवश्य सन्मार्गमा छौं अथवा खुल्ला पथ-भ्रष्टतामा छौं ।[2]

قُل لَّا تُسْأَلُونَ عَمَّا أَجْرَمْنَا وَلَا نُسْأَلُ عَمَّا تَعْمَلُونَ ﴿٢٥﴾

(२५) भनिदिनुस् कि हामीद्वारा गरिएका पापहरुका विषयमा तिमीसित केही सोधिने छैन तथा न तिम्रा कर्महरुको सोधपूछ हामीबाट हुनेछ ।

قُلْ يَجْمَعُ بَيْنَنَا رَبُّنَا ثُمَّ يَفْتَحُ بَيْنَنَا بِالْحَقِّ وَهُوَ الْفَتَّاحُ الْعَلِيمُ ﴿٢٦﴾

(२६) (उनीहरुलाई) सूचित गरिदिनुस् कि हामी सबैलाई हाम्रो प्रभु एकत्रित गरी हामीमा सत्य निर्णय गरिदिनेछ,[3] तथा त्यो निर्णय गर्ने सर्वज्ञ छ ।

---

गरिदिएका छ । ﴿مَن ذَا الَّذِي يَشْفَعُ عِندَهُ إِلَّا بِإِذْنِهِ﴾ (अल-बकर:-२५५) ﴿وَلَا يَشْفَعُونَ إِلَّا لِمَنِ ارْتَضَىٰ﴾ (सूर:अम्बिया-२८)

[1]यसका अन्तिम भाष्य वर्णन गरिएका छन् । इब्ने ज़रीर तथा इब्ने कसीर आदिले अन्तिम ईशदूत कथनका प्रकाशमा यसको यो व्याख्या गरेका छन् कि जब अल्लाह कुनै विषयका सम्बन्धमा वह्य (प्रकाशना) गर्दछ त आकाशमा उपस्थित फरिश्ता भय एवं त्रासले काम्न थाल्छन् तथा उनीमाथि बेहोसीको जस्तो अवस्था आच्छादित हुनजान्छ । होस् आए पश्चात उनीहरु प्रश्न गर्छन् त अर्श उचाल्ने फरिश्ताहरु दोस्रो फरिश्ताहरुलाई, र उनीहरु तल भएका फरिश्ताहरुलाई भन्दछन् तथा यसप्रकार सूचना पहिला आकाशका फरिश्ताहरुसम्म पुग्दछ । (इब्ने कसीर)

[2]स्पष्ट कुरो छ कि पथभ्रष्ट त्यही हुनेछ जो यस्ता वस्तुहरुलाई आराध्य ठान्दछ जसका आकाश तथा धर्तीबाट जीविका पुग्नमा कुनै भाग छैन, न उनी वर्षा गर्न सक्छन् न केही उमार्न सक्दछन् । अत: सत्यमाथि वास्तवमा एकेश्वरवादी नै हुन्, न कि दुवै ।

[3]अर्थात् त्यसको हिसाबले फल दिनेछ, राम्रालाई स्वर्गमा र नराम्रालाई नरकमा प्रवेश गर्नेछ ।

قُلْ أَرُونِيَ الَّذِينَ أَلْحَقْتُم بِهِ شُرَكَاءَ كَلَّا بَلْ هُوَ اللَّهُ الْعَزِيزُ الْحَكِيمُ ﴿٢٧﴾

(२७) भनिदिनुस् कि त्यसो भए मलाई पनि तिनीहरुलाई देखाइदेउ जसलाई तिमी अल्लाहका साझेदार बनाएर त्यसका साथ सम्मिलित गरिराखेका छौ, यस्तो कदापि होइन,[1] बरु त्यही अल्लाह हो प्रभावशाली एवं हिक्मतवाला ।

وَمَا أَرْسَلْنَاكَ إِلَّا كَافَّةً لِّلنَّاسِ بَشِيرًا وَنَذِيرًا وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿٢٨﴾

(२८) तथा हामीले तपाईंलाई सबै मानिसका लागि शुभ-सूचनाहरु सुनाउने तथा सतर्क गर्ने बनाएर पठाएका छौं । परन्तु (यो सत्य छ कि) मानिसहरुमा अधिकतर अज्ञानी छन् ।[2]

[1]अर्थात् त्यसका समान कोही छैन, न उसको साथी छ बरु त्यो हरेक वस्तुमाथि प्रभावशाली छ र त्यसका हरेक कुरा र कार्यमा हिक्मत छ ।

[2]यस आयतमा अल्लाहले एक त नबी (मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम्) को सर्वसामान्य रिसालतको वर्णन गरेको छ कि उहाँलाई सम्पूर्ण मानव जातिको पथ-प्रदर्शक तथा निर्देशक बनाएर पठाएको छ, अर्को यो वर्णन गरेको छ कि तपाईंको इच्छा एवं प्रयासका बावजूद पनि अधिकतर मानिस ईमान (आस्था) बाट बञ्चित रहनेछन् । यी दुवै कुराको व्याख्या अरु पनि अन्य स्थानहरुमा पनि गरेको छ, जस्तो उहाँको रिसालतको विषयमा भन्नुभयो: ﴿قُلْ يَا أَيُّهَا النَّاسُ إِنِّي رَسُولُ اللَّهِ إِلَيْكُمْ جَمِيعًا﴾ (अल-आराफ-१५८) ﴿تَبَارَكَ الَّذِي نَزَّلَ الْفُرْقَانَ عَلَىٰ عَبْدِهِ لِيَكُونَ لِلْعَالَمِينَ نَذِيرًا﴾ (अल-फुरक़ान-१) आफ्नो एउटा कथनमा उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) ले भन्नुभयो : मलाई पाँच यस्ता कुरा दिइएका छन् जो मभन्दा पूर्व कुनै नबीलाई दिइएन, १-महिनाको दूरीसम्म शत्रुका हृदयमा मेरो धाक बसालेर मेरो सहायता गरियो । २-पूरा भूभाग मेरो लागि मस्जिद तथा पवित्र छ, जहाँपनि नमाज़को समय आइपुग्छ मेरा अनुयायीले नमाज़ पढून् । ३-लडाईंमा प्राप्त माल मेरा लागि वैध गरिदियो जो मभन्दा पहिला कसैका लागि उचित थिएन । ४-मलाई सिफारिशको अधिकार दिइयो, ५-पहिला नबी मात्र आफ्ना समुदायका लागि पठाइन्थ्यो, मलाई सृष्टिका सम्पूर्ण मानवजातिका लागि नबी बनाएर पठाइएको छ । (सहीह बुख़ारी किताबुत्तयम्मुम, सहीह मुस्लिम, किताबुल मसाजिद) एक अन्य हदीसमा भन्नुभयो بعثت إلى الأحمر و الأسود "म काला सेता सबैतिर पठाइएका हुँ । (सहीह मुस्लिम किताबुल मसाजिद) أحمر و أسود (रातो, कालो) सित तात्पर्य केही विद्वानले जिन्न तथा मानिस केहीले अरबवासी एवं अन्य देशवासी लिएका छन् । इमाम इब्ने कसीर भन्नुहुन्छ कि दुबै अर्थ सही छन्, यसैप्रकार बहुसंख्यकको अज्ञानता तथा पथभ्रष्टताको स्पष्टीकरण गर्नु हो । ﴿وَمَا أَكْثَرُ النَّاسِ وَلَوْ حَرَصْتَ بِمُؤْمِنِينَ﴾ (सूर : यूसुफ़-१०३) "उहाँको आकांक्षाको उपरान्त अधिकतर मानिसहरु ईमान स्वीकार्ने छैन"

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٢٩﴾

(२९) तथा सोध्नुस् कि त्यो वादा (वाचा) छ कहिले ? यदि सत्य हो भने भन ।[1]

قُل لَّكُم مِّيعَادُ يَوْمٍ لَّا تَسْتَأْخِرُونَ عَنْهُ سَاعَةً وَلَا تَسْتَقْدِمُونَ ﴿٣٠﴾

(३०) उत्तर दिनुस् कि वादाको दिन ठीक निर्धारित छ जसबाट एकक्षण न तिमी पछाडी हट्न सक्छौ न अगाडी बढ्न सक्छौ ।[2]

وَقَالَ الَّذِينَ كَفَرُوا لَن نُّؤْمِنَ بِهَٰذَا الْقُرْآنِ وَلَا بِالَّذِي بَيْنَ يَدَيْهِ ۗ وَلَوْ تَرَىٰ إِذِ الظَّالِمُونَ مَوْقُوفُونَ عِندَ رَبِّهِمْ يَرْجِعُ بَعْضُهُمْ إِلَىٰ بَعْضٍ الْقَوْلَ يَقُولُ الَّذِينَ اسْتُضْعِفُوا لِلَّذِينَ اسْتَكْبَرُوا لَوْلَا أَنتُمْ لَكُنَّا مُؤْمِنِينَ ﴿٣١﴾

(३१) तथा काफ़िरहरुले भने कि हामी न त यस कुरआनलाई मानौं न यसभन्दा पूर्वका किताबहरुलाई,[3] तथा हे देख्नेहरु, काश कि तिमी यी अत्याचारीहरुलाई त्यस समय देख्यौ जबकि यिनी आफ्ना प्रभुका समक्ष उभेर एक-अर्कामाथि दोषारोपण गरिराखेका हुनेछन्,[4] तल्लो श्रेणीका मानिसहरु उच्च श्रेणीका मानिसहरुसँग भन्नेछन्[5] कि यदि तिमी नभएको भए त हामी ईमानवाला हुन्थ्यौं ।[6]

﴿وَإِن تُطِعْ أَكْثَرَ مَن فِي الْأَرْضِ يُضِلُّوكَ عَن سَبِيلِ اللَّهِ﴾ (अल-अनआम-११६) "यदि तपाईं धर्तीवासीहरुको बहुसंख्याका पछाडी हिंड्नु हुन्छ भने त उनी तपाईंलाई पथभ्रष्ट गरिदिनेछन्," जसको अभिप्राय यही भयो कि अधिक संख्या पथभ्रष्टहरुको छ ।

[1]यिनीहरु उपहास स्वरुप सोध्थे, किनकि यो हुनु उनका विचारमा टाढा एवं असम्भव थियो ।

[2]अर्थात् अल्लाहले प्रलयको एउटा दिन निश्चित गरेको छ जसको ज्ञान मात्र उसैलाई छ । तैपनि जब वचन दिइयो समय आएपछि त एकक्षण अगाडी-पछाडी हुनेछैन । ﴿إِنَّ أَجَلَ اللَّهِ إِذَا جَاءَ لَا يُؤَخَّرُ﴾ "निःसन्देह जब अल्लाहको वाचा आउँछ त फेरि टल्दैन ।" (सूरः नूह-४)

[3]जस्तै धर्मग्रन्थ तौरात, ज़बूर तथा इंजील आदि । केही ज्ञाताहरुले यसबाट तात्पर्य परलोक गृह लिएका छन् । यसमा काफ़िरहरुका विरोध एवं उपद्रवको वर्णन छ कि उनी सबै युक्तिहरुका उपरान्त पनि पवित्र कुरआन तथा परलोकप्रति ईमान स्वीकार्नबाट भागिराखेका छन् ।

[4]अर्थात् संसारमा यिनी कुफ्र तथा शिर्कमा परस्पर साथी एवं यस नाताले परस्पर प्रेमी थिए, किन्तु परलोकमा परस्पर शत्रु तथा एक-अर्कालाई दोष दिनेछन् ।

[5]अर्थात् संसारमा यिनीहरु जो न सोची-सम्झी साधारण रीतिमा हिंड्थे आफ्ना ती नेताहरुसित भन्नेछन् जसका उनी संसारमा अनुगामी बनिरहे ।

[6]अर्थात् तिमीले नै हामीलाई ईशदूत तथा सत्यका प्रचारकहरुका अनुगमनबाट रोकेका थियौ यदि तिमी यस्तो नगरेको भए त हामी निश्चय ईमान भएका हुने थियौं ।

قَالَ الَّذِينَ اسْتَكْبَرُوا لِلَّذِينَ اسْتُضْعِفُوا أَنَحْنُ صَدَدْنَاكُمْ عَنِ الْهُدَىٰ بَعْدَ إِذْ جَاءَكُم بَلْ كُنتُم مُّجْرِمِينَ ﴿٣٢﴾

(३२) यी उच्च मानिस ती दुर्बल मानिसहरुलाई उत्तर दिनेछन् कि के तिम्रो पासमा मार्गदर्शन आइसके पश्चात हामीले तिमीलाई त्यसबाट रोकेका थियौं । (होइन) बरु तिमी (स्वयं) अपराधी थियौ ।[1]

وَقَالَ الَّذِينَ اسْتُضْعِفُوا لِلَّذِينَ اسْتَكْبَرُوا بَلْ مَكْرُ اللَّيْلِ وَالنَّهَارِ إِذْ تَأْمُرُونَنَا أَن نَّكْفُرَ بِاللَّهِ وَنَجْعَلَ لَهُ أَندَادًا ۚ وَأَسَرُّوا النَّدَامَةَ لَمَّا رَأَوُا الْعَذَابَ ۚ وَجَعَلْنَا الْأَغْلَالَ فِي أَعْنَاقِ الَّذِينَ كَفَرُوا ۚ هَلْ يُجْزَوْنَ إِلَّا مَا كَانُوا يَعْمَلُونَ ﴿٣٣﴾

(३३) (तथा यसका उत्तरमा) यी दुर्बल मानिसहरु ती अहंकारीहरुसित भन्नेछन्, (होइन, होइन) बरु दिनरात छल-कपटले हामीलाई अल्लाहका साथ कुफ्र गर्नु तथा त्यसका साथ साझेदार निर्धारित गर्नुको तिमीबाट आदेश दिनु हाम्रो बेईमानको कारण भयो,[2] तथा यातनालाई देख्नासाथ सबै मनै-मनमा लज्जित भइराखेका हुनेछन्,[3] तथा काफिरहरुका गर्दनमा हामीले तौक (जंजीर) हालिदिनेछौं ।[4] उनीहरुलाई केवल उनीहरुबाट गरिएका कर्महरुको प्रतिफल दिइनेछ ।[5]

[1]अर्थात् हामीसँग कुनचाहिं शक्ति थियो कि हामीले तिमीलाई सत्य-मार्गबाट रोक्दथ्यौं, तिमीले स्वयं त्यसमाथि ध्यान दिएनौं तथा आफ्ना मनका कारण त्यसलाई स्वीकार गर्नबाट भाग्दै गऱ्यौ तथा आज अपराधी हामीलाई बनाइराखेका छौ जबकि सबैकुरा तिमीले आफ्नै मनले गऱ्यौ । अत: अपराधी त तिमी स्वयं हौ न कि हामी ।

[2]अर्थात् हामी अपराधी त्यसबेला हुन्थ्यौं जब आफ्ना मनले पैग़म्बरहरुको इन्कार गर्दथ्यौं, जबकि यथार्थ यो हो कि तिमी रात-दिन हामीलाई पथभ्रष्ट गर्न तथा अल्लाहको इन्कार गर्न तथा त्यसका साझी बनाउनमा तयार गरिरहयौ जसबाट अन्तत: हामी तिम्रा अनुयायी बनेर ईमान (आस्था) बाट बञ्चित रहयौं ।

[3]अर्थात् परस्पर दोषारोपण त गर्नेछन् किन्तु हृदयमा दुबै गुट आफ्ना कुफ्र (अविश्वास) माथि पश्चाताप गर्नेछन् परन्तु शत्रुका अशुभका भयले व्यक्त गर्ने छैनन् ।

[4]अर्थात् यस्ता जंजीर जो उनका हातलाई उनका गर्दनसित बाँध्नेछन् ।

[5]अर्थात् दुवैलाई उनका कर्महरुको दण्ड हुनेछ, प्रमुखहरुलाई उनका अनुसार तथा उनका अनुगामीहरुलाई तिनका अनुसार, जस्तो अर्को स्थानमा भन्नुभयो: ﴿لِكُلٍّ ضِعْفٌ وَلَٰكِن لَّا تَعْلَمُونَ﴾ (अल-आराफ़-३८) अर्थात् "प्रत्येकलाई दुईगुना दण्ड हुनेछ तर तिमीहरुलाई थाहा छैन ।"

وَمَآ أَرْسَلْنَا فِى قَرْيَةٍ مِّن نَّذِيرٍ إِلَّا قَالَ مُتْرَفُوهَآ إِنَّا بِمَآ أُرْسِلْتُم بِهِۦ كَٰفِرُونَ ﴿٣٤﴾

(३४) तथा हामीले त जुन वस्तीमा जो पनि सचेत गर्नेवाला पठायौं त्यहाँका सम्पन्न मानिसहरुले यही भने कि जुन वस्तुका साथ तिमी पठाइएका हौ हामी त्यसका साथ कुफ्र गर्नेहरु हौं ।[1]

وَقَالُوا۟ نَحْنُ أَكْثَرُ أَمْوَٰلًا وَأَوْلَٰدًا وَمَا نَحْنُ بِمُعَذَّبِينَ ﴿٣٥﴾

(३५) तथा भने कि हामी धन तथा सन्तानमा अधिक छौं, यो हुनसक्दैन कि हामीलाई यातना दिइयोस् ।[2]

قُلْ إِنَّ رَبِّى يَبْسُطُ ٱلرِّزْقَ لِمَن يَشَآءُ وَيَقْدِرُ وَلَٰكِنَّ أَكْثَرَ ٱلنَّاسِ

(३६) भनिदिनुस् कि मेरो प्रभु जसको लागि चाहन्छ जीविकालाई विस्तृत गरिदिन्छ तथा संकुचित कम पनि गरिदिन्छ,[3] परन्तु अधिकतर

[1]यहाँ नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिइराखिएको छ कि मक्काका धनवान तथा प्रमुख उहाँ सल्लल्लाहु अलैहि वसल्लममाथि विश्वास गरिराखेका छैनन् तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई दुख पुऱ्याइराखेका छन् त यो कुनै नयाँ कुरा होइन, प्रत्येक युगका सम्पन्न मानिसहरुले पैग़म्बरहरुलाई नकारेकै छन् तथा प्रत्येक पैग़म्बरमाथि ईमान स्थापित गर्ने सर्वप्रथम समाजका दरिद्र एवं निर्धन वर्गका मानिसिहरु नै हुन्थे । जस्तै आदरणीय नूहका समुदायले आफ्ना सन्देष्टासित भनें, ﴿ أَنُؤْمِنُ لَكَ وَٱتَّبَعَكَ ٱلْأَرْذَلُونَ ﴾ "के हामीले तिमीमाथि ईमान (विश्वास) कायम गरौं जबकि तिम्रा अनुयायी नीच मानिसहरु छन् ?" (अल-शोअरा, १११) अरु सन्देष्टाहरुसित पनि उनका समुदायले यही भने, हेर्नुस् सूर: आराफ़-७५ अल-अनआम-५३, १३३ तथा सूर: बनी इस्राईल-१६ आदि । مُتْرَفُونَ को अर्थ हो धनी तथा प्रमुख मानिसहरु ।

[2]अर्थात् जब अल्लाहले संसारमै हामीलाई धन, सन्तानका प्रचुरताले सम्मानित गरेको छ त प्रलय पनि यदि हुनेछ भने त हामीलाई यातना हुनेछैन । मानौं उनीहरुले परलोकलाई पनि संसारमाथि आंकलन गरे कि जुनप्रकार यस लोकमा काफ़िर तथा ईमानवालामाथि अल्लाहको दया भइराखेको छ परलोकमा पनि यसैप्रकार हुनेछ जबकि परलोक त प्रतिकार ग्रह हो । त्यहाँ त यस लोकमा गरिएका कर्महरुको प्रतिफल प्राप्त हुन्छ, राम्रा कर्महरुको राम्रा, नराम्रा कर्महरुको नराम्रो, तथा संसार परीक्षा गृह हो । यहाँ अल्लाह तआला प्रत्येकलाई परीक्षार्थ सांसारिक सुख-सुविधा प्रदान गर्दछ । अथवा उनीहरुले सांसारिक धन, साधनको प्रचुरतालाई अल्लाहको प्रसन्नताको लक्षण ठाने जबकि यस्ता छैन । यदि यस्तो भएको भए त अल्लाह आफ्ना आज्ञाकारी भक्तहरुलाई सबभन्दा अधिक धन सन्तान प्रदान गर्दथ्यो ।

[3]यसमा काफ़िरहरुका भ्रम तथा शंकाको निवारण गरिदैछ कि जीविकाको विस्तार तथा संकुचन अल्लाहको प्रसन्नता अथवा अप्रसन्नताको द्योतक होइन, बरु यसको सम्बन्ध अल्लाहको हिक्मत एवं इच्छासित छ । यसकारण त्यसले धन त्यसलाई पनि दिन्छ जसलाई रुचाउँछ तथा त्यसलाई पनि जसलाई मन पराउँदैन

لَا يَعْلَمُونَ ٣٦

मानिस जान्दैनन् ।

وَمَا أَمْوَالُكُمْ وَلَا أَوْلَادُكُم بِالَّتِي تُقَرِّبُكُمْ عِندَنَا زُلْفَىٰ إِلَّا مَنْ آمَنَ وَعَمِلَ صَالِحًا فَأُولَٰئِكَ لَهُمْ جَزَاءُ الضِّعْفِ بِمَا عَمِلُوا وَهُمْ فِي الْغُرُفَاتِ آمِنُونَ ٣٧

(३७) तथा तिम्रा धन एवं सन्तान यस्ता छैनन् कि तिमीलाई हाम्रा छेउ (पदहरुबाट) निकट गरिदेऊन् ।[1] परन्तु जो ईमान कायम गर्छन् तथा पुण्यका कर्म गर्दछन्[2] त उनका लागि उनका कर्महरुको दुईगुना प्रतिफल छ[3] तथा उनी निर्भय एवं निश्चिन्त भई उच्च भवनहरुमा रहनेछन् ।

وَالَّذِينَ يَسْعَوْنَ فِي آيَاتِنَا مُعَاجِزِينَ أُولَٰئِكَ فِي الْعَذَابِ مُحْضَرُونَ ٣٨

(३८) तथा जो मानिस हाम्रा आयतहरुलाई नीचा देखाउने दौडधूपमा लागिरहन्छन्, यी नै हुन् जो यातनामा (समातिएर) उपस्थित गरिनेछन् ।

قُلْ إِنَّ رَبِّي يَبْسُطُ الرِّزْقَ لِمَن يَشَاءُ مِنْ عِبَادِهِ وَيَقْدِرُ لَهُ ۚ وَمَا أَنفَقْتُم مِّن شَيْءٍ فَهُوَ يُخْلِفُهُ ۖ

(३९) भनिदिनुस् कि मेरो प्रभु आफ्ना भक्तहरुमा जसका लागि चाहन्छ जीविका विस्तृत गर्दछ तथा जसका लागि चाहन्छ नाप (साँगुरो) गरिदिन्छ,[4] तथा तिमी जे-जति पनि अल्लाहका मार्गमा खर्च गर्नेछौ

तथा जसलाई चाहन्छ धनी गर्दछ र जसलाई चाहन्छ दरिद्र राख्दछ ।

[1]अर्थात् यो धन यस कुराको प्रमाण होइन कि हामीलाई तिमीसित प्रेम छ र हाम्रा दरबारमा तिमीलाई विशेष स्थान प्राप्त छ ।

[2]अर्थात् हाम्रो प्रेम तथा निकटता प्राप्त गर्नुको साधन त मात्र ईमान तथा सत्कर्म हो, जस्तो हदीसमा भनियो, "अल्लाह तिम्रो रुपरेखा तथा तिम्रा धन-सम्पत्ति हेर्दैनन् त्यो त तिम्रा हृदय तथा कर्महरुलाई हेर्दछ ।" (सहीह मुस्लिम, किताबुल बिर्र, बाव तहरीमे जुल्मिल मुस्लिम)

[3]वरु कैयन् गुना, एक पुण्यको प्रतिफल कमसेकम दश पुण्य, अधिक सात सय गुनासम्म अपितु त्यसभन्दा पनि अधिकसम्म ।

[4]अतः त्यसले काफ़िरहरुलाई पनि निकै धन दिन्छ, किन्तु के-को लागि ? ढील (छुट) दिनका लागि तथा कहिले ईमान्दारलाई निर्धन राख्दछ, के-का लागि ? त्यसका पुण्य एवं प्रतिफललाई बढाउनका लागि । यसकारण केवल धनको अधिकता त्यसको प्रसन्नताको, तथा कमी त्यसको अप्रसन्नताको प्रमाण होइन । यो पुनरावृत्ति मात्र बल (जोड) दिनका लागि हो ।

وَهُوَ خَيْرُ الرّٰزِقِيْنَ ﴿٣٩﴾

अल्लाहले त्यसको (पूरा-पूरा) प्रतिफल दिनेछ[1] तथा त्यो सर्वोत्तम जीविका प्रदान गर्नेवाला हो ।[2]

وَيَوْمَ يَحْشُرُهُمْ جَمِيْعًا ثُمَّ يَقُوْلُ لِلْمَلٰٓئِكَةِ أَهٰٓؤُلَآءِ إِيَّاكُمْ كَانُوْا يَعْبُدُوْنَ ﴿٤٠﴾

(४०) तथा ती सबैलाई अल्लाहले त्यसदिन एकत्रित गरी फरिश्ताहरुसित सोध्नेछ कि के यिनीहरु तिम्रो इबादत (उपासना) गर्दथे ।[3]

قَالُوْا سُبْحٰنَكَ أَنْتَ وَلِيُّنَا مِنْ دُوْنِهِمْ ۚ بَلْ كَانُوْا

(४१) उनीहरुले भन्नेछन् कि तिमी महिमावान् हौ तथा हाम्रो संरक्षक त तिमी हौ न कि यिनीहरु ।[4] यिनीहरु

---

[1] إخلاف को अर्थ हो, प्रतिकार तथा प्रतिफल दिनु । यो प्रतिफल संसारमा पनि संभव छ तथा आख़िरत (परलोक) मा त निश्चित छ । हदीस कुद्सीमा चर्चित छ, अल्लाह तआ़ला भन्नुहुन्छ, «أَنْفِقْ أُنْفِقْ عَلَيْكَ» "त तिमी खर्च गर म तिमीमाथि खर्च गर्नेछु (अर्थात प्रतिफल दिनेछु) ।" (सहीह बुख़ारी सूर: हूद) दुई फरिश्ता प्रत्येक दिन घोषणा गर्दछन्, एउटा भन्दछ, «اللّٰهُمَّ أَعْطِ مُمْسِكًا تَلَفًا» (हे अल्लाह ! खर्च नगर्नेहरुलाई ग्रस्त पारिदेउ) र अर्कोले भन्छ «اللّٰهُمَّ أَعْطِ مُنْفِقًا خَلَفًا» हे अल्लाह ! खर्च गर्नेहरुलाई सर्वोत्तम प्रतिफल प्रदान गर । (अल-बुख़ारी, किताबुज़ ज़कात)

[2] किनभने एक व्यक्ति यदि कसैलाई केही दिन्छ भने त्यसको यो दिने कुरो अल्लाहको संमति तथा इच्छा एवं त्यसको भागलेखबाट नै छ । वास्तवमा दिनेवाला त्यसको जीविका प्रदान गर्ने होइन जुनप्रकार पिता बच्चाहरुको अथवा राजा आफ्नो सेनाको पोषक (संरक्षक) कहलाउँछ । जबकि राजा तथा प्रजा, बच्चाहरु तथा ठूला सबैलाई जीविका वास्तवमा अल्लाह नै दिन्छ जो सबैको रचयिता हो । अतः जो पनि अल्लाहद्वारा दिइएका सम्पत्तिबाट कसैलाई केही दिन्छ त त्यो यस्ता मालको प्रयोग गर्दछ जुनकि अल्लाहले नै दिएको छ । तसर्थ वास्तवमा अन्नदाता पनि अल्लाह नै भयो । तथापि यो त्यसको विशेष दया एवं उपकार हो कि त्यसबाट दिइएका मालमध्ये त्यसको प्रसन्नताका अनुसार व्यय (खर्च) गर्नु पश्चात त्यसले पुण्य एवं प्रतिफल पनि प्रदान गर्दछ ।

[3] यो बहुदेववादीहरुलाई अपमानित गर्नका लागि अल्लाहले फरिश्ताहरुसित प्रश्न गर्नेछ, जस्तो ईशदूत ईसाका विषयमा वर्णित छ कि अल्लाहले उनीसित पनि प्रश्न गर्नेछ, "के तिमीले मानिसहरुसित भनेका थियौ कि मलाई तथा मेरी आमा (मरियम) लाई अल्लाहका अतिरिक्त आराध्य बनाइहाल्नु ?" (अल-मायदा-११६) आदरणीय ईसाले उत्तर दिनेछन् हे अल्लाह तिमी पवित्र छौ, जसको मलाई अधिकार थिएन त्यो कुरा म किन भन्न सक्दथे ? जस्तो कि सूर: अल-फुरक़ान-१७ मा पनि वर्णन भयो कि के यिनी तिम्रा भनाईमा तिम्रो बन्दना गर्दथे ?

[4] अर्थात् फरिश्ताहरु पनि आदरणीय ईसाको जस्तै अल्लाह तआलाको पवित्रताको वर्णन

يَعْبُدُونَ الْجِنَّ أَكْثَرُهُم بِهِم مُّؤْمِنُونَ ﴿٤١﴾

जिन्नहरुको इबादत गर्दथे,[1] यिनीहरुमध्ये अधिकतरलाई उनैमाथि ईमान थियो ।

فَالْيَوْمَ لَا يَمْلِكُ بَعْضُكُمْ لِبَعْضٍ نَّفْعًا وَلَا ضَرًّا وَنَقُولُ لِلَّذِينَ ظَلَمُوا ذُوقُوا عَذَابَ النَّارِ الَّتِي كُنتُم بِهَا تُكَذِّبُونَ ﴿٤٢﴾

(४२) तसर्थ आज तिमीमध्ये कोही (पनि) कसैका लागि (पनि कुनै प्रकारका) लाभ-हानिका स्वामी हुनेछैन ।[2] तथा हामी अत्याचारीहरुसित[3] भनिदिनेछौं कि त्यस अग्निको यातना चाख जसलाई तिमी झुठ्लाउँदै रहयौ ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ قَالُوا مَا هَٰذَا إِلَّا رَجُلٌ يُرِيدُ أَن يَصُدَّكُمْ عَمَّا كَانَ يَعْبُدُ آبَاؤُكُمْ وَقَالُوا

(४३) तथा जब उनका समक्ष हाम्रा स्पष्ट आयतहरु पढिन्छन् त भन्दछन् कि यो यस्तो व्यक्ति[4] हो जो तिमीलाई तिम्रा पूर्वजहरुका देवताहरुबाट रोक्न चाहन्छ (यसका

गरी आफ्नो निर्दोषता प्रकट गर्नेछन् तथा भन्नेछन् कि हामी त तिम्रा दास हौं र तिमी हाम्रा स्वामी हौ, हाम्रो यिनीसित के सम्बन्ध ?

[1]जिन्नसित तात्पर्य शैतान हुन्, अर्थात् यिनी वस्तुत: शैतानका पूजारी हुन् किनकि तिनै उनलाई मूर्तिपूजामा लगाउँछन् तथा उनलाई पथभ्रष्ट गर्दछन्, जस्तो अन्य स्थानमा भन्यो : ﴿إِن يَدْعُونَ مِن دُونِهِ إِلَّا إِنَاثًا وَإِن يَدْعُونَ إِلَّا شَيْطَانًا مَّرِيدًا﴾

"अर्थात् यिनीहरु त अल्लाहलाई छाडि केवल स्त्रीहरुलाई पुकार्दछन्, तथा वास्तवमा यिनी मात्र दुष्ट शैतानको पूजा गर्दछन् ।" (अन-निसा-११७)

[2]अर्थात् संसारमा तिमी यस भ्रममा उनको उपासना एवं इबादत गर्दथे कि तिनले तिमीलाई लाभ पुऱ्याउने छन्, तिम्रो सिफारिश गर्नेछन् तथा अल्लाहका दण्डबाट तिमीलाई मुक्ति दिलाउनेछन्, जस्तो आज पनि पीरहरुका तथा समाधिहरु (कब्रहरु) का पूजारीहरुको दशा छ, किन्तु हेरिहाल कि आज यिनी कुनै कुरामा समर्थ छैनन् ।

[3]अत्याचारीहरुसित अभिप्राय अल्लाहका अतिरिक्त अन्यका पूजारी हुन्, किनकि शिर्क (द्वैत) महाअत्याचार हो एवं मुश्रिक (मिश्रणवादी) सबभन्दा ठूला अत्याचारी ।

[4]व्यक्तिसित तात्पर्य अन्तिम ईशदूत आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम हुन्, बाबु-बाजेको धर्म उनका निकट सही थियो, यसकारण उनले उहाँ सल्लल्लाहु अलैहि वसल्लमको अपराध यो भने कि यो तिमीलाई ती पूज्यहरुबाट रोक्न चाहन्छ जसको तिम्रा पिता उपासना गर्दथे ।

مَا هٰذَآ اِلَّآ اِفْكٌ مُّفْتَرًى ۗ وَقَالَ الَّذِيْنَ كَفَرُوْا لِلْحَقِّ لَمَّا جَآءَهُمْ ۙ اِنْ هٰذَآ اِلَّا سِحْرٌ مُّبِيْنٌ ۝

अतिरिक्त कुनै कुरा छैन) तथा भन्दछन् कि यो त रचिएको आक्षेप हो,[1] तथा सत्य उनका पासमा आइसके पश्चात पनि काफ़िर यही भन्दै गरे कि यो त खुल्लारुपमा जादू हो ।[2]

وَمَآ اٰتَيْنٰهُمْ مِّنْ كُتُبٍ يَّدْرُسُوْنَهَا وَمَآ اَرْسَلْنَآ اِلَيْهِمْ قَبْلَكَ مِنْ نَّذِيْرٍ ۝

(४४) तथा यी (मक्कावासीहरुलाई) न त हामीले किताबहरु प्रदान गरेका छौं जसलाई पढ्छन् तथा न उनका पासमा तपाईंभन्दा पूर्व कोही सतर्क गर्नेवाला आयो ।[3]

وَكَذَّبَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ۙ وَمَا بَلَغُوْا مِعْشَارَ مَآ اٰتَيْنٰهُمْ فَكَذَّبُوْا رُسُلِيْ ۫ فَكَيْفَ كَانَ نَكِيْرِ ۝

(४५) तथा यिनीभन्दा पूर्वका मानिसहरुले पनि हाम्रा कुरालाई झुठ्लाएका थिए तथा उनीहरुलाई हामीले जुन दिएका थियौं यी त त्यसका दसौं भागलाई पनि पुगेनन्, त उनीहरुले मेरा दूतहरुलाई झुठ्लाए, (अनि हेर) कि मेरो यातनाले के (कठोर) अवस्था भयो ।[4]

---

[1]अर्को هذا को संकेत पवित्र ईशवाणी कुर्आनतिर छ, जसलाई उनीहरुले मनगढन्त रुपमा रचेको आक्षेप एवं झूठ घोषित गरे ।

[2]पवित्र कुर्आनलाई प्रथम मनगढन्त झूठ भने र यहाँ प्रत्यक्ष जादू । प्रथमको सम्बन्ध कुर्आनका भावार्थ एवं अर्थसित छ, अर्कोको सम्बन्ध कुर्आनका चमत्कारिक वाक्यक्रम तथा भाषाशैली, चमत्कार अलंकारसित । (फ़तहुल क़दीर)

[3]यसकारण कि उनीहरु कामना गर्दथे कि उनका पासमा पनि कोही ईशदूत आओस् तथा कुनै आकाशीय ग्रन्थ अवतरित होस्, किन्तु जब यी कुराहरु आए त नकारदिए ।

[4]यहाँ मक्काका मूर्तिपूजकहरुलाई सावधान गरिंदैछ कि तिमीले झुठ्लाउनु तथा इन्कारको जुन मार्ग अप्नाएका छौ त्यो अति हानिकारक छ । तिमीभन्दा पूर्वका समुदाय पनि यसै मार्गमा हिंडेर ध्वस्त एवं नाश भएका छन्, जबकि यी समुदाय धन, सम्पत्ति, शक्ति एवं बल तथा आयुमा तिमीभन्दा बढी थिए, तिमी त उनका दशौं भागलाई पनि पुग्दैनौ । यसका उपरान्त उनी अल्लाहका प्रकोपबाट बच्न सकेनन् । यसै विषयलाई सूरः अहकाफ़को आयत २६ मा वर्णित गरिएको छ ।

قُلْ إِنَّمَآ أَعِظُكُم بِوَٰحِدَةٍ ۖ أَن تَقُومُوا۟ لِلَّهِ مَثْنَىٰ وَفُرَٰدَىٰ ثُمَّ تَتَفَكَّرُوا۟ ۚ مَا بِصَاحِبِكُم مِّن جِنَّةٍ ۚ إِنْ هُوَ إِلَّا نَذِيرٌ لَّكُم بَيْنَ يَدَىْ عَذَابٍ شَدِيدٍ ﴿٤٦﴾

(४६) भनिदिनुस् कि म तिमीलाई केवल एउटै कुराको शिक्षा दिन्छु कि तिमी अल्लाहका लागि (स्वच्छ भावले दूराग्रहलाई त्यागी) दुई-दुई मिलेर अथवा एक्लै-एक्लै उभेर विचार त गर, तिम्रा यस साथीलाई कुनै उन्माद छैन ।[1] त्यो त तिमीलाई एउटा अत्यन्त (कडा) यातना आउनुभन्दा पूर्व सतर्क गर्नेवाला हो ।[2]

قُلْ مَا سَأَلْتُكُم مِّنْ أَجْرٍ فَهُوَ لَكُمْ ۖ إِنْ أَجْرِىَ إِلَّا عَلَى ٱللَّهِ ۖ وَهُوَ عَلَىٰ كُلِّ شَىْءٍ شَهِيدٌ ﴿٤٧﴾

(४७) भनिदिनुस् कि जुन प्रतिफलमा तिनीबाट माँग्दछु, त्यो तिम्रो लागि हो ।[3] मेरो प्रतिफल त अल्लाहको जिम्मामा छ, त्यो प्रत्येक वस्तुलाई राम्ररी जान्दछ ।

[1]अर्थात् म तिमीलाई तिम्रा वर्तमान व्यवहारबाट तर्साउँछु तथा एउटै कुराको शिक्षा दिन्छु, तथा त्यो यो हो कि तिमी दुराग्रह एवं अहंकार छाडेर मात्र अल्लाहका लागि एक-एक, दुई-दुई भई मेरा विषयमा विचार गर कि मेरो जीवन तिम्रो माझमा गुज्रेको छ र अब पनि जुन आमन्त्रण म तिमीलाई दिइराखेको छु के त्यसमा कुनै यस्तो कुरो छ जसबाट यो कुरा लागिराखेको छ कि म भित्र उन्माद छ । यदि तिमी जातीय पक्षपात तथा मनोमानीबाट उच्च भई विचार गर्नेछौ भने अवश्य तिमी बुझ्नेछौ कि तिम्रा साथीमा कुनै उन्माद छैन ।

[2]अर्थात् त्यो त मात्र तिम्रो मार्ग दर्शाउनको लागि आएको छ ताकि तिमी त्यस घोर यातनाबाट बच्न सक जो सन्मार्ग नअप्नाउनका कारण तिमीले भोग्नुपर्नेछ । हदीसमा वर्णित छ कि नबी सल्लल्लाहु अलैहि वसल्लम एक दिन सफा पर्वतमा उक्लिनु भयो तथा भन्नुभयो يا صباحاه जसलाई सुनेर कुरैश एकत्र भए । उहाँले भन्नुभयो "यदि म तिमीलाई सूचना दिन्छु कि शत्रु तिमीमाथि प्रातः अथवा सन्ध्यामा प्रहार गर्नेवाला छ त के तिमी मलाई सच्चा मान्नेछौ ?" उनीहरुले भने, किन होइन ? उहाँले भन्नुभयो, सुनिहाल कि म तिमीलाई साह्रो यातनाको आगमनभन्दा पूर्व सावधान गर्दछु । यो सुनेर अबू लहबले भन्यो «تَبًّا لَكَ! أَلِهٰذَا جَمَعْتَنَا؟» तिम्रो नाश होस् के यसका लागि तिमीले हामीलाई एकत्र गरेका थियौ ? जसमाथि अल्लाहले सूरः ﴿تَبَّتْ يَدَآ أَبِى لَهَبٍ﴾ अवतरित गऱ्यो (सहीह बुख़ारी तफ़सीर सूरः सबा)

[3]यसमा आफ्नो निःस्वार्थता तथा सांसारिक धन-साधनबाट अरुचिलाई व्यक्त गरेको छ ताकि उनका हृदयमा यदि यो शंका उत्पन्न हुन्छ कि यस नबूअतका दावाबाट यसको आशय कहीं माया-मोह (संसार कामना) त छैन, त त्यो समाप्त हुन जाओस् ।

قُلۡ إِنَّ رَبِّي يَقۡذِفُ بِٱلۡحَقِّ عَلَّٰمُ ٱلۡغُيُوبِ ۝٤٨

(४८) भनिदिनुस् कि मेरो प्रभु सत्य (साँचो प्रकाशना) अवतरित गर्दछ,[1] त्यो प्रत्येक गुप्त कुरा (परोक्ष) लाई जान्दछ ।

قُلۡ جَآءَ ٱلۡحَقُّ وَمَا يُبۡدِئُ ٱلۡبَٰطِلُ وَمَا يُعِيدُ ۝٤٩

(४९) भनिदिनुस्, सत्य आइसक्यो, असत्य न त प्रथम पटक उठ्न सक्यो न पुनः उठ्न सक्नेछ ।[2]

قُلۡ إِن ضَلَلۡتُ فَإِنَّمَآ أَضِلُّ عَلَىٰ نَفۡسِيۖ وَإِنِ ٱهۡتَدَيۡتُ فَبِمَا يُوحِيٓ إِلَيَّ رَبِّيٓۚ إِنَّهُۥ سَمِيعٞ قَرِيبٞ ۝٥٠

(५०) भनिदिनुस् कि यदि म विचलित हुन्छु भने मेरो विचलित हुनु (को भार) ममाथि नै छ तथा यदि म सत्यमार्गमा छु भने त्यस प्रकाशनाका कारण जो मेरो प्रभु ममाथि गर्दछ ।[3] त्यो

[1] قَذَفَ को अर्थ ती वाण एवं पत्थर चलाउनु पनि हो तथा कुरा गर्नु पनि । यहाँ अर्को अर्थमा छ, अर्थात् त्यो सत्यका साथ वार्तालाप गर्दछ, आफ्ना रसूलहरुमाथि प्रकाशना (वह्य) पठाउँछ तथा उनीद्वारा मानिसहरुका लागि सत्य स्पष्ट गर्दछ । जस्तो अन्य स्थानमा भन्यो :

﴿ يُلۡقِي ٱلرُّوحَ مِنۡ أَمۡرِهِۦ عَلَىٰ مَن يَشَآءُ مِنۡ عِبَادِهِۦ ﴾

"आफ्ना भक्तहरुमाथि जसलाई चाहन्छ फरिश्ताहरुद्वारा आफ्नो प्रकाशना (वह्य) बाट सुशोभित गर्दछ ।" (अल-मोमिन-१५)

[2] हक्सित तात्पर्य कुर्आन तथा बातिल (अनृत) बाट तात्पर्य कुफ्र (अविश्वास) तथा शिर्क (अनेकेश्वरवाद हो) । भावार्थ हो अल्लाहको तर्फबाट अल्लाहको धर्म एवं त्यसको धर्मशास्त्र कुर्आन आइसकेको छ, जसबाट अनृत (असत्य) संकुचित एवं समाप्त भइसकेको छ । अब त्यो टाउको उचाल्न योग्य रहेन, जस्तो भन्नुभो : ﴿ بَلۡ نَقۡذِفُ بِٱلۡحَقِّ عَلَى ٱلۡبَٰطِلِ فَيَدۡمَغُهُۥ فَإِذَا هُوَ زَاهِقٞ ﴾ (अल-अम्बिया-१८) हदीसमा वर्णित छ कि जुन दिन मक्का विजय भयो नबी सल्लल्लाहु अलैहि वसल्लमले काबामा प्रवेश गर्नुभयो । चारैतिर मूर्तिहरु स्थापित थिए, उहाँ धनुष (कमान) को चुच्चोले ती मूर्तिहरुलाई हान्दै जान्थे तथा यो आयत एवं सूरः बनी इस्राईलको आयत ﴿ وَقُلۡ جَآءَ ٱلۡحَقُّ وَزَهَقَ ٱلۡبَٰطِلُ ﴾ पढदै जानुहुन्थ्यो । (सहीह बुखारी, किताबुल जिहाद, बाबु इज़ालतिल अस्नाम मिन हौलिल काबः)

[3] अर्थात् भलाई सबै अल्लाहको तर्फबाट छ तथा अल्लाहले जुन प्रकाशना तथा प्रत्यक्ष सत्य अवतरित गरेको छ त्यसमा संमार्ग तथा निर्दोष छ, संमार्ग मानिसहरुलाई त्यसैबाट प्राप्त हुन्छ । अनि जो विचलित हुन्छ त त्यसमा उसको आफ्नै अल्छीपना तथा मनोकांक्षाको हस्तक्षेप हुन्छ । अतः त्यसको भार पनि उसैमाथि हुनेछ । आदरणीय अब्दुल्लाह बिन मसऊद कुनै प्रश्नकर्ताका उत्तरमा आफ्नो तर्फबाट केही भन्दाखेरि भन्नुहुन्थ्यो :

अत्यन्त सुन्नेवाला अत्यन्त निकट छ ।[1]

(५१) तथा यदि तपाईं (त्यो समय) देख्नुहुन्छ जबकि यी काफ़िर अत्तालिएको अवस्थामा हिंडिराखेको हुनेछन्, अनि उम्केर भाग्नुको कुनै परिस्थिति हुनेछैन[2] तथा निकटका स्थानबाट समातिनेछन् ।

وَلَوۡ تَرَىٰٓ إِذۡ فَزِعُواْ فَلَا فَوۡتَ وَأُخِذُواْ مِن مَّكَانٖ قَرِيبٖ ۝٥١

(५२) तथा त्यस समय भन्नेछन् कि हामी त्यस (कुर्आन) माथि ईमान कायम गऱ्यौं परन्तु यति टाढा स्थानबाट (अभीष्ट वस्तु) कसरी हात आउन सक्छ ?[3]

وَقَالُوٓاْ ءَامَنَّا بِهِۦ وَأَنَّىٰ لَهُمُ ٱلتَّنَاوُشُ مِن مَّكَانِۭ بَعِيدٖ ۝٥٢

(५३) तथा यसभन्दा पूर्व त उनीहरुले यसबाट कुफ्र गरेका थिए तथा टाढा-टाढाबाट नहेरिकन फ्याँक्दै गरे ।[4]

وَقَدۡ كَفَرُواْ بِهِۦ مِن قَبۡلُۖ وَيَقۡذِفُونَ بِٱلۡغَيۡبِ مِن مَّكَانِۭ بَعِيدٖ ۝٥٣

«أَقُولُ فِيهَا بِرَأْيِي؛ فَإِنْ يَكُنْ صَوَابًا فَمِنَ اللهِ، وَإِنْ يَكُنْ خَطَأً فَمِنِّي وَمِنَ الشَّيطَانِ، وَاللهُ وَرَسُولُهُ بَرِيئَانِ مِنْهُ»

"म यसमा आफ्नो विचारले भनिराखेको छु यदि सही छ भने अल्लाहको तर्फबाट र यदि गलत छ भने मेरो तथा शैतानको तर्फबाट छ, एवं अल्लाह तथा त्यसका रसूल यसबाट पवित्र छन् ।" (इब्ने कसीर)

[1]जस्तो हदीसमा भन्नुभयो,

«إِنَّكُمْ لا تَدْعُونَ أَصَمَّ وَلَا غَائِبًا، إِنَّمَا تَدْعُونَ سَمِيعًا قَرِيبًا مُجِيبًا»

"तिमी बहिरा, अनुपस्थितलाई पुकार्दैनौ बरु त्यसलाई पुकार्दछौ जो सुन्नेवाला, समीप तथा स्वीकार गर्नेवाला छ ।" (बुख़ारी, किताबुद्दुआ, बाबुद दुआ इज़ा अला अक़ब:)

[2] فَلَا فَوۡتَ कतै भाग्न सक्ने छैनन्, किनकि उनीहरु अल्लाहको पकडमा हुनेछन् । यो महशरका मैदानको वर्णन हो ।

[3] تَنَاوُش को अर्थ समात्नु हो, अर्थात् अब परलोकमा उनीहरुलाई ईमान कसरी प्राप्त हुनसक्दछ जबकि संसारमा त्यसबाट भाग्दैरहे । मानौं आख़िरत (परलोक) ईमानका लागि संसारका सापेक्ष दुरस्थ छ, जस्तै दूरको वस्तुलाई समात्नु सम्भव छैन, आख़िरतमा ईमान स्वीकार गर्ने अवसर छैन ।

[4]अर्थात् आफ्ना अनुमानले भन्दै गरे कि क़्यामत (प्रलय) तथा हिसाब आदि छैन, या कुर्आनका विषयमा भन्दै गरे कि यो जादू, मनगढन्त झूठ तथा पूर्वजहरुको कथा हो, अथवा मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमका सन्दर्भमा भनिराखे कि

وَحِيلَ بَيْنَهُمْ وَبَيْنَ مَا يَشْتَهُونَ كَمَا فُعِلَ بِأَشْيَاعِهِم مِّن قَبْلُ ۚ إِنَّهُمْ كَانُوا فِي شَكٍّ مُّرِيبٍ ﴿٥٤﴾

(५४) तथा उनका इच्छाहरु एवं उनका मध्ये आवरण पारिदियो[1] जस्तो कि यसभन्दा पूर्व पनि यिनीहरु जस्ताका साथ गरियो,[2] उनीहरु पनि (यिनीहरुको जस्तो) सन्देह एवं दुविधामा (परेका) थिए ।[3]

## سُورَةُ فَاطِرٍ

## सूरतु फ़ातिर-३५

सूरतु फ़ातिर मक्कामा अवतरित भयो, यसमा पैंतालिस आयतहरु तथा पाँच रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

الْحَمْدُ لِلَّهِ فَاطِرِ السَّمَاوَاتِ وَالْأَرْضِ جَاعِلِ الْمَلَائِكَةِ رُسُلًا أُولِي أَجْنِحَةٍ مَّثْنَىٰ وَثُلَاثَ وَرُبَاعَ ۚ يَزِيدُ فِي الْخَلْقِ

(१) यस अल्लाहका लागि समस्त प्रशंसाहरु छन् जो (सर्वप्रथम) आकाशहरु एवं धर्तीलाई उत्पन्न गर्ने[4] तथा दुई-दुई, तीन-तीन तथा चार-चार पखेटा भएका फरिश्ताहरुलाई आफ्नो दूत

---

यो तान्त्रिक हो, भविष्यवेत्ता हो, कवि हो अथवा उन्मादग्रस्त हो, जबकि कुनै कुराको कुनै प्रमाण (युक्ति) उनीसित थिएन ।

[1]अर्थात् आखिरत (परलोक) मा उनीहरु चाहनेछन् कि उनको ईमान स्वीकार गरियोस्, यातनाबाट उनको मुक्ति होस्, किन्तु उनका तथा उनका आकांक्षाका वीच पर्दा (आवरण) हालिनेछ अर्थात उनको आकांक्षा अस्वीकार गरिनेछ ।

[2]अर्थात् पछिल्ला समुदायहरुको ईमान पनि त्यसबेला स्वीकार गरिएन जब उनीहरु प्रकोपका दर्शनका पश्चात यिनको ईमान पनि कसरी स्वीकार गरे ।

[3]अत: अब प्रकोपका दर्शनका पश्चात यिनको ईमान पनि कसरी स्वीकार हुनसक्छ ? आदरणीय कतादह भन्नुहुन्छ, "शंका एवं सन्देहबाट बच, जो शंकाको स्थितिमा मर्नेछ त्यसै स्थितिमा उठाइनेछ तथा जो विश्वासमा मर्नेछ प्रलयका दिन विश्वासमा नै उठ्नेछ ।" (इब्ने क़सीर)

[4] فَاطِرٌ (फ़ातिर) को अर्थ हो अविष्कारक, प्रारम्भमा अविष्कार गर्नेवाला । यो अल्लाहका सामर्थ्यतिर संकेत हो कि उसले आकाश तथा धर्ती सर्वप्रथम बिना नमूना बनाए, तथा उसका लागि मानिसहरुलाई पैदा गर्नु के कठिन छ ?

مَا يَشَآءُ ۚ إِنَّ اللّٰهَ عَلٰى كُلِّ شَىْءٍ قَدِيرٌ ①

बनाउनेवाला हो,[1] सृष्टिमा जे चाहन्छ अधिक गर्दछ,[2] अल्लाह तआला निःसन्देह प्रत्येक वस्तुमाथि सामर्थ्य राख्दछ ।

مَا يَفْتَحِ اللّٰهُ لِلنَّاسِ مِن رَّحْمَةٍ فَلَا مُمْسِكَ لَهَا ۖ وَمَا يُمْسِكْ فَلَا مُرْسِلَ لَهُ مِنۢ بَعْدِهِۦ ۚ وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ②

(२) अल्लाह (तआला) जुन दया मानिसका लागि खोलिदिन्छ त त्यसलाई कोही बन्द गर्ने छैन तथा जसलाई बन्द गरिदिन्छ त्यसका पश्चात त्यसलाई कोही प्रारम्भ गर्ने छैन ।[3] तथा त्यही प्रभावशाली तत्वज्ञ छ ।

يَٰٓأَيُّهَا النَّاسُ اذْكُرُوا نِعْمَتَ اللّٰهِ عَلَيْكُمْ ۚ هَلْ مِنْ خَٰلِقٍ غَيْرُ اللّٰهِ يَرْزُقُكُم مِّنَ السَّمَآءِ وَالْأَرْضِ ۚ لَآ إِلَٰهَ إِلَّا هُوَ ۖ فَأَنَّىٰ تُؤْفَكُونَ ③

(३) हे मानिसहरु ! तिमीमाथि जुन उपहार अल्लाह (तआला) ले गरेका छन् तिनलाई स्मरण गर । के अल्लाहका अतिरिक्त कोही अन्य पनि स्रष्टा छ जो तिमीलाई आकाश तथा धर्तीबाट जीविका पुऱ्याउन सक्छ ? त्यसका अतिरिक्त कोही पूज्य छैन त तिमी कहाँ फर्किजाँदैछौ ?[4]



[1]तात्पर्य जिब्रील, मीकाईल, इस्राफ़ील एवं इज़्राईल फरिश्ताहरु हुन् जसलाई अल्लाह सन्देशवाहकहरु (अम्बिया) तिर अथवा विभिन्न महत्वपूर्ण कार्यहरुका लागि दूत बनाएर पठाउँछ । यिनीहरुमध्ये कसैका दुई, कसैका तीन तथा कसैका चार पखेटा छन् जसद्वारा उनी धर्तीमा आउँछन् तथा धर्तीबाट आकाशमा जान्छन् ।

[2]अर्थात् केही फरिश्ताहरुका यसभन्दा पनि अधिक पंख छन् । जस्तो कि हदीसमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभो, मैले मेराजको राति जिब्रीललाई उनको वास्तविक रुपमा देखें, उनका छ सय (पर) पखेटा थिए (सहीह बुख़ारी, तफ़सीर सूरः नज्म, बाबु फकान क़ाब कौसैने औ अदना) केही विद्वानले यसलाई सामान्य राखेका छन्, जसमा आँखा, मुख, नाक तथा रुप सबैको सौन्दर्य सम्मिलित छ ।

[3]यिनै उपहारहरुमा रसूलहरुलाई पठाउनु तथा धर्मशास्त्र अवतरित गर्नु पनि हो । अर्थात प्रत्येक वस्तुको दाता पनि त्यही हो तथा फिर्ता लिने एवं रोक्नेवाला पनि त्यही हो । त्यसका अतिरिक्त न कोही दाता छ न उपकारी न रोक्नेवाला छ न संकुचित गर्नेवाला ।

[4]अर्थात् यस वर्णन एवं स्पष्टिकरणका पश्चात पनि तिमी अल्लाहका अतिरिक्त अन्यको इबादत गर्दछौ ? تُؤْفَكُونَ यदि أَفْك छ भने त अर्थ हुनेछ 'फर्कनु' तथा यदि बाट छ भने त अर्थ हे झूठ, जो सचबाट विमुख हुनुको नाम हो । अभिप्राय यो हो कि तिमीमा एकेश्वरवाद तथा आख़िरतको इन्कार कहाँबाट आयो जबकि तिमी मान्दछौ कि तिम्रो जीविका दिनेवाला तथा उत्पत्तिकर्ता अल्लाह हो । (फ़तहुल क़दीर)

(४) तथा यदि उनीहरु तपाईंलाई झुठ्लाउँछन् भने तपाईभन्दा पूर्वका (समस्त) रसूल पनि झुठ्लाइ सकिएका छन् । समस्त कार्य अल्लाहतिरै फर्काइन्छन् ।[१]

وَإِن يُكَذِّبُوكَ فَقَدْ كُذِّبَتْ رُسُلٌ مِّن قَبْلِكَ ۚ وَإِلَى اللَّهِ تُرْجَعُ الْأُمُورُ ﴿٤﴾

(५) हे मानिसहरु ! अल्लाह (तआला) को वाचा सत्य छ[२] तिमीलाई सांसारिक जीवन धोकामा नपारोस्,[३] तथा न धोकेबाज (छलि शैतान) तिमीलाई निश्चिन्ततामा लिप्त गरोस् ।[४]

يَا أَيُّهَا النَّاسُ إِنَّ وَعْدَ اللَّهِ حَقٌّ ۖ فَلَا تَغُرَّنَّكُمُ الْحَيَاةُ الدُّنْيَا ۖ وَلَا يَغُرَّنَّكُم بِاللَّهِ الْغَرُورُ ﴿٥﴾

(६) (याद राख) ! शैतान तिम्रो शत्रु हो तिमी उसलाई शत्रु जान[५] त्यो त आफ्ना गिरोहलाई केवल यसकारण बोलाउँछ कि उनी सबै नरकमा जाने होऊन् ।

إِنَّ الشَّيْطَانَ لَكُمْ عَدُوٌّ فَاتَّخِذُوهُ عَدُوًّا ۚ إِنَّمَا يَدْعُو حِزْبَهُ لِيَكُونُوا مِنْ أَصْحَابِ السَّعِيرِ ﴿٦﴾

---

[१]यसमा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना छ कि तपाईंलाई झुठ्लाएर यिनीहरु कहाँ जानेछन् ? अन्ततः सबै विषयहरुको निर्णय त हामीले नै गर्नुछ । जस्तै पहिलेका समुदायहरुले आफ्ना पैग़म्बरहरुलाई झुठ्लाए त उनीहरुलाई विनाश बाहेक के प्राप्त भयो ? अतः यिनी पनि यदि रोकिएनन् भने यिनलाई नाश गर्नु हाम्रा लागि कठिन छैन ।

[२]कि प्रलयको स्थापना हुनेछ तथा राम्रा, नराम्रा कर्महरुको प्रतिकार दिइनेछ ।

[३]अर्थात् परलोकका ती उपहारहरुबाट निश्चिन्त नगरिदेओस् जो अल्लाह तआलाले आफ्ना भक्त तथा रसूलहरुका अनुयायीहरुका लागि तयार गरेको छ । तसर्थ यस संसारका सामयिक आनन्दमा गुमिएर परलोकका स्थाई सुखहरुको अन्देखि नगर ।

[४]त्यसका दाऊ तथा छलबाट बचेर रह, यसकारण कि त्यो ठूलो धोकेबाज छ तथा उसको उद्देश्य नै तिमीलाई धोकामा राखेर स्वर्गबाट बञ्चित गर्नु हो, यही शब्द सूरः लुक्मान ३३ मा पनि गुज्रिसकेको छ ।

[५]अर्थात् उसित कडा वैरभाव राख, त्यसको धोखा-धडीबाट बच जस्तो शत्रुबाट बचावका लागि मनुष्य गर्दछ । अर्को स्थानमा यसै विषयको वर्णन यसप्रकार गरिएको छ :

﴿أَفَتَتَّخِذُونَهُ وَذُرِّيَّتَهُ أَوْلِيَاءَ مِن دُونِي وَهُمْ لَكُمْ عَدُوٌّ ۚ بِئْسَ لِلظَّالِمِينَ بَدَلًا﴾

"के तिनी त्यस शैतान तथा त्यसको सन्तानलाई मलाई त्यागेर आफ्नो मित्र बनाउँछौ हाँलाकि उनीहरु तिम्रा शत्रु हुन्, अत्याचारीहरुका लागि नराम्रो प्रतिफल छ ।" (अल-कहफ़-५०)

اَلَّذِيْنَ كَفَرُوْا لَهُمْ عَذَابٌ شَدِيْدٌ ۖ وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَهُمْ مَّغْفِرَةٌ وَّاَجْرٌ كَبِيْرٌ ⑦

(७) जो मानिस काफ़िर भए उनका लागि कठोर दण्ड छ तथा जो मानिस ईमान स्वीकार गरे एवं सत्कर्म गरे उनका लागि क्षमा तथा (अति) उत्तम प्रतिफल छ ।[१]

اَفَمَنْ زُيِّنَ لَهٗ سُوْٓءُ عَمَلِهٖ فَرَاٰهُ حَسَنًا ؕ فَاِنَّ اللّٰهَ يُضِلُّ مَنْ يَّشَآءُ وَيَهْدِيْ مَنْ يَّشَآءُ ۖؗ فَلَا تَذْهَبْ نَفْسُكَ عَلَيْهِمْ حَسَرٰتٍ ؕ اِنَّ اللّٰهَ عَلِيْمٌۢ بِمَا يَصْنَعُوْنَ ⑧

(८) के त्यो व्यक्ति जसका लागि उसका कुकर्म सुशोभित गरिदिइएका छन् त त्यो उनलाई राम्रो ठान्दछ, (के त्यो संमार्ग प्राप्त व्यक्ति जस्तो छ ?)[२] (विश्वास गर) अल्लाह जसलाई चाहन्छ पथ-विचलित गर्दछ तथा जसलाई चाहन्छ मार्गदर्शन दिन्छ,[३] तसर्थ तपाईंलाई उनीमाथि दुःखी भई आफ्ना प्राणलाई कष्टमा पार्नु हुँदैन ।[४] यिनीहरु जे-जति गरिराखेका छन् त्यससित निःसन्देह अल्लाह राम्ररी अवगत छ ।[५]

وَاللّٰهُ الَّذِيْٓ اَرْسَلَ الرِّيٰحَ فَتُثِيْرُ

(९) तथा अल्लाह नै वायुहरु चलाउँछ जो बादलहरुलाई उठाउँछन्, अनि हामी बादलहरुलाई

[१]अल्लाह तआ़लाले अन्य स्थानहरुको जस्तै यहाँ पनि ईमानका साथ सत्कर्महरुको चर्चा गरी त्यसको महत्व स्पष्ट गरेको छ ताकि ईमान भएकाहरु सत्कर्मबाट कुनै क्षण निश्चिन्त नरहून्, किनकि ठूला प्रतिफलको वाचा त्यस ईमानमाथि नै छ जसका साथ सत्कर्म हुनेछ ।

[२]जुनप्रकार काफ़िर तथा दुराचारी छन्, उनीहरु कुफ्र, शिर्क, कुकर्म एवं दुराचार गर्दछन् र यो ठान्दछन् कि उनी राम्रो गरिराखेका छन् । त के यस्ता व्यक्ति जसलाई अल्लाहले पथभ्रष्ट गरिदिएको छ, त्यसका बचावका लागि तपाईंको पासमा कुनै उपाय छ ? अथवा यो त्यसकाबराबर छ जसलाई अल्लाहले संमार्ग प्रदान गरेको छ ? उत्तर नकारात्मक नै छ, होइन कदापि होइन ।

[३]अल्लाह तआ़ला आफ्ना न्यायका अनुरुप आफ्नो विधिका अनुसार उसलाई पथभ्रष्ट गर्दछ जो निरन्तर आफ्ना कर्तुतहरुबाट स्वयं त्यसको पात्र हुन्छ, तथा संमार्ग त्यसलाई दिइन्छ जो त्यसको अभिलाषी हुन्छ ।

[४]किनकि अल्लाह तआ़लाको प्रत्येक काम हिक्मत तथा पूरा ज्ञानमा आधारित छ । अतः कसैको पथभ्रष्टतामाथि यति शोक नगर्नुस् कि आफ्ना प्राणलाई नै खतरामा पार्नुस् ।

[५]अर्थात् उनका कुनै कर्म अथवा कथन त्यसबाट लुकेको छैन, अभिप्राय यो हो कि उनका साथ अल्लाहको व्यवहार एक सर्वज्ञ, सर्वसूचित तथा तत्वदर्शी छ, साधारण राजाहरुको होइन जो आफ्ना अधिकारको हच्चुवा प्रयोग गर्दछन् । कहिले सलाम गर्नबाट खिन्न हुन जान्छन् तथा कहिले अपशब्दमा नै पुरस्कारबाट सम्मानित गर्दछन् ।

سَحَابًا فَسُقْنٰهُ اِلٰى بَلَدٍ مَّيِّتٍ فَاَحْيَيْنَا بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ؕ كَذٰلِكَ النُّشُوْرُ ۝

सुकेको धर्तीतिर लैजान्छौं तथा त्यसबाट त्यस धर्तीलाई त्यसको मृत्युको पश्चात जीवित गरिदिन्छौं । यसैप्रकार पुन: जीवित भई उठ्नु (पनि) हो ।[1]

مَنْ كَانَ يُرِيْدُ الْعِزَّةَ فَلِلّٰهِ الْعِزَّةُ جَمِيْعًا ؕ اِلَيْهِ يَصْعَدُ الْكَلِمُ الطَّيِّبُ وَالْعَمَلُ الصَّالِحُ يَرْفَعُهٗ ؕ وَالَّذِيْنَ يَمْكُرُوْنَ السَّيِّاٰتِ

(१०) जो व्यक्ति सम्मान प्राप्त गर्न चाहन्छ त अल्लाह (तआला) का लागि नै सम्मान छ ।[2] समस्त पवित्र वाक्य उसैतिर उक्लिन्छन्,[3] तथा सत्कर्म उनलाई उच्च गर्दछ,[4] र जो मानिस नराम्राका दाऊ घातमा



[1]अर्थात् जुनप्रकार वर्षा गरी हामी सुकेको धर्तीलाई हरियो गरिदिन्छौं, यसैप्रकार प्रलयका दिन तमाम मृतक मानिसहरुलाई पनि हामीले जीवित गरिदिनेछौं । हदीसमा वर्णित छ कि मनुष्यको पूरा शरीर गलेर जान्छ मात्र ढाडको अस्थिको एउटा सूक्ष्म अंग सुरक्षित रहन्छ, यसैबाट त्यसको पुन: उत्पत्ति तथा रचना हुनेछ । (सहीह बुख़ारी)

[2]अर्थात् जो चाहन्छ कि लोक-परलोकमा त्यसलाई सम्मान प्राप्त होस् त त्यो अल्लाहको आज्ञा पालन गरोस् त्यसबाट यो उद्देश्य प्राप्त हुनेछ । यसकारण कि लोक-परलोकको स्वामी अल्लाह नै छ, सबै सम्मान उसैका पासमा छन् त्यो जसलाई सम्मान दिन्छ, त्यही सम्मानित हुनेछ, जसलाई त्यो अपमानित गरिदिन्छ संसारको कुनै शक्ति उसलाई सम्मान दिन सक्दैन । अर्को स्थानमा भनेको छ : ﴿الَّذِيْنَ يَتَّخِذُوْنَ الْكٰفِرِيْنَ اَوْلِيَآءَ مِنْ دُوْنِ الْمُؤْمِنِيْنَ ۚ اَيَبْتَغُوْنَ عِنْدَهُمُ الْعِزَّةَ فَاِنَّ الْعِزَّةَ لِلّٰهِ جَمِيْعًا﴾ (सूर:अन्निसा-१३९)

[3] الكَلِم बहुवचन हो كَلِمَة को । स्वच्छ (पवित्र) शब्दहरुसित अभिप्राय अल्लाहको पवित्रता, प्रशंसा, कुर्आन पढ्नु, राम्रो कुराको आदेश दिनु तथा नराम्रो कुराबाट रोक्नु हो । उक्लिन्छन् को अर्थ अंगीकार गर्नु हो अथवा फरिश्ताहरुबाट उनीहरुलाई लिएर आकाशमा उक्लनु हो, ताकि अल्लाहले तिनका प्रतिफल प्रदान गरोस् ।

[4] يَرْفَعُهٗ मा सर्वनाम कसतिर फर्कन्छ ? केही विद्वान भन्दछन् कि الكَلِم الطَّيِّب तिर ,अर्थात् पुण्यकर्म स्वच्छ शब्दलाई माथि अल्लाहतिर लैजान्छन् । अर्थात् मात्र मुखले अल्लाहको स्मरण (पवित्रता तथा प्रशंसा) केही होइन जबसम्म त्यसका साथ सत्कर्म अर्थात् आदेशहरु तथा अनिवार्य कर्महरुको पालन नहोस् । केही विद्वानहरु भन्दछन् कि يَرْفَعُهٗ मा सर्वनामकर्ता अल्लाहतिर फर्कन्छ । अर्थ यो हो कि अल्लाह तआला सत्कर्मलाई पवित्र शब्दहरुबाट उच्च गर्दछ, किनकि सत्कर्मबाट नै यस कुराको प्रमाण प्राप्त हुन्छ कि यसलाई गर्नेवाला वस्तुत: अल्लाहको पवित्रता एवं प्रशंसा गर्नुमा शुद्ध छ । (फ़तहुल क़दीर) मानौं कथन, कर्म बिना अल्लाहका समक्ष अमान्य छ ।

لَهُمْ عَذَابٌ شَدِيدٌ ۖ وَمَكْرُ أُولَٰئِكَ هُوَ يَبُورُ ⑩

लागिरहन्छन्[1] उनका लागि अत्यन्त कठोर यातनाहरु छन् तथा उनको जो पाखण्ड नाश भएर जानेछ ।[2]

وَاللَّهُ خَلَقَكُم مِّن تُرَابٍ ثُمَّ مِن نُّطْفَةٍ ثُمَّ جَعَلَكُمْ أَزْوَاجًا ۚ وَمَا تَحْمِلُ مِنْ أُنثَىٰ وَلَا تَضَعُ إِلَّا بِعِلْمِهِ ۚ وَمَا يُعَمَّرُ مِن مُّعَمَّرٍ وَلَا يُنقَصُ مِنْ عُمُرِهِ إِلَّا فِي كِتَابٍ ۚ

(११) (मानिसहरु,) अल्लाहले तिमीलाई माटोबाट अनि पछि वीर्यबाट पैदा गऱ्यो[3] अनि तिमीलाई जोडा-जोडा (नर-नारी) बनाएको छ । नारीहरुबाट गर्भधारण गर्न तथा शिशुको जन्म लिनु सबै उसको ज्ञानमा छ,[4] तथा जो दीर्घ आयुवाला आयु दिइयोस् तथा जस्तो कि जो कोहीको आयु घटोस् ।[5]

---

[1]गुप्तरुपले कसैलाई क्षति पुऱ्याउनका उपायलाई मक्र भन्दछन्, कुफ्र तथा शिर्क गर्नु पनि मक्र हो कि यसप्रकारले अल्लाहका मार्गलाई क्षति पुऱ्याइन्छ नबी सल्लल्लाहु अलैहि वसल्लमको हत्याको जुन योजना मक्काका काफिर गरिराखे त्यो पनि मक्र हो, पाखण्ड पनि मक्र हो यो शब्द सामान्य छ, मक्रका सबै रुपहरुलाई सम्मिलित् छ ।

[2]अर्थात् उनको मक्र (कपट) पनि नाश हुनेछ तथा त्यसको भार पनि कुनैमाथि पर्नेछ, जस्तो कि भनेको छ : ﴿وَلَا يَحِيقُ الْمَكْرُ السَّيِّئُ إِلَّا بِأَهْلِهِ﴾ (फातिर-४३)

[3]अर्थात् तिम्रा पिता आदमलाई माटोबाट अनि तत्पश्चात तिम्रो जाति (वंशधारा) लाई स्थापित राख्नका निम्ति मानिसको उत्पत्तिलाई वीर्यसित सम्बन्धित गरिदियो जो पुरुषको पिठ्यूँबाट निस्केर स्त्रीका गर्भाशयमा जान्छ ।

[4]अर्थात् त्यसबाट कुनै वस्तु लुकेको छैन, यहाँसम्मकि धर्तीमा खस्ने पातहरुलाई तथा धर्ती भित्रका अन्धकारहरुमा विकसित हुने बीजलाई पनि जान्दछ । (अल-अनआम-५९)

[5]यसको अभिप्राय यो हो कि लघु आयु तथा अल्प आयु अल्लाहका लेख तथा निर्णयबाट छ । यसका अतिरिक्त आयु लामो अथवा छोटो हुनुको कारण पनि छ । लघुताका कारणमा सम्बन्धिहरुका साथ सद्व्यवहार आदि जस्तो कि हदीसमा छ, तथा अल्पताका कारणहरुमा अधिक पाप (अवज्ञा) गर्नु हो, जस्तै कसैको आयु ७० वर्ष छ भने अधिकताका कारणहरुले कहिले अल्लाह त्यसलाई बढाइदिन्छ । तथा कहिले त्यसमा कमी गरिदिन्छ जब त्यो कमीका कारणहरुलाई अप्नाउँछ । तथा यी सबैथोक उसले लौह महफूजमा अंकित गरिदिएको छ । अतः आयुमा यो कमी तथा अधिकता ﴿فَإِذَا جَاءَ أَجَلُهُمْ لَا يَسْتَأْخِرُونَ سَاعَةً وَلَا يَسْتَقْدِمُونَ﴾ का विपरीत छैन । यसको समर्थन अल्लाहका यस वचनबाट पनि हुन्छ ﴿يَمْحُو اللَّهُ مَا يَشَاءُ وَيُثْبِتُ ۖ وَعِندَهُ أُمُّ الْكِتَابِ﴾ (अर्राद-३९) "अल्लाह जे चाहन्छ मेटाउँछ तथा लेख्छ तथा त्यसका पासमा लौहे महफूज (सुरक्षित पुस्तक) छ ।" (फतहुल कदीर)

إِنَّ ذَٰلِكَ عَلَى اللَّهِ يَسِيرٌ ⑪

त्यो सबै पुस्तकमा अंकित छ । अल्लाह (महान) का लागि यो कुरा अत्यन्त सरल छ ।

وَمَا يَسْتَوِي الْبَحْرَانِ هَٰذَا عَذْبٌ فُرَاتٌ سَائِغٌ شَرَابُهُ وَهَٰذَا مِلْحٌ أُجَاجٌ وَمِن كُلٍّ تَأْكُلُونَ لَحْمًا طَرِيًّا وَتَسْتَخْرِجُونَ حِلْيَةً تَلْبَسُونَهَا وَتَرَى الْفُلْكَ فِيهِ مَوَاخِرَ لِتَبْتَغُوا مِن فَضْلِهِ وَلَعَلَّكُمْ تَشْكُرُونَ ⑫

(१२) तथा समान छैनन् दुई समुद्र । यो मिठो छ तिर्खा मेटाउँछ पिउनमा राम्रो । तथा त्यो अर्को खारा छ नमिठो, तिमी यी दुबैबाट ताजा मासु खान्छौ तथा त्यो आभूषण निकाल्दछौ जसलाई तिमी लगाउँछौ, तथा तिमी देख्दछौ कि ठूला-ठूला डुङ्गाहरु जसलाई च्यात्नेवाली[1] ती समुद्रहरुमा छन् ताकि तिमी त्यसको कृपा (अनुग्रह) को खोजी गर र ताकि तिमी त्यसको कृतज्ञता व्यक्त गर ।

يُولِجُ اللَّيْلَ فِي النَّهَارِ وَيُولِجُ النَّهَارَ فِي اللَّيْلِ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ كُلٌّ يَجْرِي لِأَجَلٍ مُّسَمًّى ذَٰلِكُمُ اللَّهُ رَبُّكُمْ لَهُ الْمُلْكُ وَالَّذِينَ تَدْعُونَ مِن دُونِهِ مَا يَمْلِكُونَ مِن قِطْمِيرٍ ⑬

(१३) त्यो रातलाई दिनमा तथा दिनलाई रातमा प्रवेश गराउँछ तथा सूर्य एवं चन्द्रमालाई उसैले कार्यमा लगाइदिएको छ । प्रत्येक एउटा निर्धारित अवधिसम्म चलिराखेका छन् । यही हो अल्लाह[2] तिमी सबैको पालनकर्ता यसैको राज्य छ । तथा जसलाई तिमीले त्यसका अतिरिक्त पुकारिराखेका छौ उनी त खजूरको गुठली (गेडा) का बोक्राको पनि स्वामी छैनन् ।[3]

إِن تَدْعُوهُمْ لَا يَسْمَعُوا دُعَاءَكُمْ

(१४) यदि तिमी उनीहरुलाई पुकार्दछौ भने उनीहरु तिम्रो पुकार सुन्दैनन्[4] तथा यदि (मानिलिऔं)

---

[1] مواخر (मवाखिर) ती डुङ्गाहरु जो आउँदा-जाँदा पानीलाई चिर्दै गुज्रन्छन् । आयतमा वर्णित अन्य विषयहरुको भाष्य सूरः अल-फुर्कानमा गुज्रिसकेको छ ।

[2] अर्थात् उक्त सबै कार्यहरुको कर्ता ।

[3] अर्थात् यति हीन वस्तुका पनि स्वामी होइनन्, न त्यसलाई पैदा गर्नुमा सामर्थ्य छ । قطمير (कितमीर) त्यस झिल्ली (आवरण) लाई भन्दछन् जो खजूर तथा त्यसका बीजका मध्ये हुन्छ, यो पातलो छिल्का गुठलीमाथि रहन्छ ।

[4] अर्थात यदि तिमी उनीहरुलाई कठिनाईहरुमा पुकार्दछौ भने उनीहरु तिम्रो गुहार सुन्दैनन्

وَلَوْ سَمِعُوا مَا اسْتَجَابُوا لَكُمْ ۖ وَيَوْمَ الْقِيَامَةِ يَكْفُرُونَ بِشِرْكِكُمْ ۚ وَلَا يُنَبِّئُكَ مِثْلُ خَبِيرٍ ⑭

सुनि पनि हाल्छन् भने स्वीकार गर्ने छैनन्,[1] बरु केयामतका दिन तिम्रा शीर्कलाई स्पष्टत: नकारदिने छन् ।[2] तपाईंलाई कोही पनि (अल्लाह तआ़ला) जस्तो जानकार सूचनाहरु दिने छैन ।[3]

يَا أَيُّهَا النَّاسُ أَنتُمُ الْفُقَرَاءُ إِلَى اللَّهِ ۖ وَاللَّهُ هُوَ الْغَنِيُّ الْحَمِيدُ ⑮

(१५) हे मानिसहरु ! तिमी अल्लाहका भिख़ारी हौ[4] तथा अल्लाह नै निस्पृह[5] गुणवान छ ।[6]

إِن يَشَأْ يُذْهِبْكُمْ وَيَأْتِ بِخَلْقٍ جَدِيدٍ ⑯

(१६)यदि त्यो चाहन्छ भने तिमीलाई नष्ट गर्नसक्छ तथा एउटा नयाँ सृष्टि उतपन्न गर्नसक्छ ।[7]

किनकि उनीहरु जड हुन् अथवा कैयन् मनहरु माटोका मुनि गाडिएका ।

[1]अर्थात् यदि यो मानिन्छ कि उनी सुनि पनि हाल्छन् त व्यर्थ, यसकारण कि उनीहरु तिम्रो विनयका अनुसार तिमीलाई केही गर्न सक्दैन ।

[2]तथा भन्नेछन् ما كنتم إيانا تعبدون "तिमी हाम्रो उपासना गर्दैनथ्यौ" (यूनुस-२८) ﴿إِن كُنَّا عَنْ عِبَادَتِكُمْ لَغَافِلِينَ﴾ "हामी त तिम्रो उपासनाबाट बेखबर थियौं ।" (यूनुस-२९) यस आयतबाट यो पनि ज्ञात हुन्छ कि अल्लाह बाहेक जसको इबादत गरिन्छ ती सबै पत्थरका मूर्तिहरु नै हुने छैनन्, बरु तिनीहरुमा चेतनशील (फरिश्ताहरु, जिन्न, शैतान तथा धर्मात्मा) पनि हुनेछन् । त्यसैले त उनीहरु इन्कार गर्नेछन्, तथा यो पनि ज्ञात भयो कि उनीहरुलाई आवश्यकता पूर्तिका लागि पुकार्नु शिर्क हो ।

[3]यसकारण कि उसको जस्तो परिपूर्ण ज्ञान कसैसित पनि छैन । त्यही सबै विषयको वास्तविकता एवं तथ्यबाट पूर्णता अवगत छ, जसमा यी पुकारिनेहरुको विवशता, पुकारलाई नसुन्नु तथा प्रलयका दिन यसलाई इन्कार गर्नु पनि सम्मिलित छ ।

[4]ناس शब्द सर्वसाधारणका लागि छ जसमा अम्बिया, धर्मात्मा सबै आउँछन् । अल्लाहका द्वारका सबै भिख़ारी छन् किन्तु अल्लाहलाई कसैको आवश्यकता छैन ।

[5]त्यो यति निस्पृह छ कि सबै मानिस यदि त्यसको अवज्ञा गर्ने बनिहालून् त यसबाट त्यसका राज्यमा कुनै कमी, तथा सबै त्यसका आज्ञाकारी बनिहालून् भने यसबाट त्यसको शक्तिमा कुनै अधिकता हुनेछैन । बरु अवज्ञाबाट आफ्नै हानि हुनेछ तथा त्यसको बन्दना एवं आज्ञापालनबाट मानवको आफ्नै लाभ छ ।

[6]प्रशंसित छ आफ्ना अनुग्रहहरुका कारण, किनकि प्रत्येक उपकार जो उसले आफ्ना भक्तहरुसँग गरेका छन् त्यसमा त्यो प्रशंसा एवं कृतज्ञताको अधिकारी छ ।

[7]यो पनि त्यसको निस्पृहताको मर्यादाको एउटा उदाहरण हो कि यदि त्यो चाहन्छ भने तिमीलाई नष्ट गरी एउटा नयाँ उत्पत्ति पैदा गर्नसक्दछ जो त्यसको

وَمَا ذَٰلِكَ عَلَى اللَّهِ بِعَزِيزٍ ﴿١٧﴾

(१७) तथा यो कुरो अल्लाह (तआला) का लागि केही कठिन छैन ।

وَلَا تَزِرُ وَازِرَةٌ وِزْرَ أُخْرَىٰ ۚ وَإِن تَدْعُ مُثْقَلَةٌ إِلَىٰ حِمْلِهَا لَا يُحْمَلْ مِنْهُ شَيْءٌ وَلَوْ كَانَ ذَا قُرْبَىٰ ۗ إِنَّمَا تُنذِرُ الَّذِينَ يَخْشَوْنَ رَبَّهُم بِالْغَيْبِ وَأَقَامُوا الصَّلَاةَ ۚ وَمَن تَزَكَّىٰ فَإِنَّمَا يَتَزَكَّىٰ لِنَفْسِهِ ۚ وَإِلَى اللَّهِ الْمَصِيرُ ﴿١٨﴾

(१८) तथा कोही पनि बोझ उठाउने व्यक्ति अरुहरुको बोझ उठाउने छैन[1] तथा यदि कोही ठूलो बोझवाला आफ्ना भार उठाउनका लागि कसै अन्यलाई बोलाउनेछ, भने त्यो त्यसमध्ये केही पनि उठाउन सक्ने छैन चाहे निकट सम्बन्धी नै किन नहोस् ।[2] तिमी केवल तिनीहरुलाई नै सावधान गर्नसक्छौ जो नदेखिकनै आफ्ना प्रभुसित तर्सन्छन् तथा नमाज़ नियमित रुपमा पढ्छन्[3] तथा जो पवित्र हुन्छ ।[4] र फर्कनु अल्लाहतिरै छ ।

وَمَا يَسْتَوِي الْأَعْمَىٰ وَالْبَصِيرُ ﴿١٩﴾

(१९) तथा अन्धा एवं आँखाहरु भएका समान छैनन् ।

---

आज्ञाकारी हुन्छ अथवा अभिप्राय यो हो कि एउटा नयाँ सृष्टि तथा नयाँ संसार बनाइदिन्छ जससित तिमी अपरिचित हुन्छौ ।

[1]हो, जसले अरुहरुलाई पथभ्रष्ट गरेका हुनेछन् उनीहरु आफ्ना पापका बोझका साथ उनका पापहरुको भार पनि उठाइने छ । जस्तो कि आयत ﴿وَلَيَحْمِلُنَّ أَثْقَالَهُمْ وَأَثْقَالًا مَّعَ أَثْقَالِهِمْ﴾ (अल-अनकबूत-१३) तथा हदीस «مَن سَنَّ سُنَّةً سَيِّئَةً، كَانَ عَلَيهِ وِزْرُهَا، وَوِزْرُ مَنْ عَمِلَ بِهَا مِن بَعْدِه» (सहीह मुस्लिम, किताबुज्जकात, बाबुल हस्से अलस्सदक:---) बाट स्पष्ट छ। किन्तु अरुहरुको बोझ पनि वास्तवमा उनको आफ्नो बोझ हो कि उनीहरुले नै अरुहरुलाई पथभ्रष्ट गरेका थिए ।

[2] مُثقلة अर्थात نفسٌ مثقلة यस्तो व्यक्ति जो पापहरुका बोझले लादिएको हुनेछ, त्यो आफ्ना बोझ उठाउनका लागि आफ्ना सम्बन्धिहरुलाई पनि बोलाउनेछ त तिनी पनि तयार हुनेछैनन् ।

[3]अर्थात तिमीबाट सावधान गर्नुको लाभ तिमीहरुलाई नै हुनसक्छ, मानौं तिमी उनीहरुलाई तर्साउँछौ, उनलाई होइन जसलाई सावधान गर्नुबाट कुनै लाभ हुँदैन । जुनप्रकार अरु स्थानमा भन्नुभो : ﴿إِنَّمَا أَنتَ مُنذِرُ مَن يَخْشَاهَا﴾ (सूर: अन्नाज़िआत-४५) तथा ﴿إِنَّمَا تُنذِرُ مَنِ اتَّبَعَ الذِّكْرَ وَخَشِيَ الرَّحْمَٰنَ بِالْغَيْبِ﴾ (सूर: यासीन-११)

[4] تزكّى एवं تطهّر को अर्थ हो शिर्क तथा दुराचारको मलिनताबाट पवित्र हुनु ।

وَلَا الظُّلُمٰتُ وَلَا النُّوْرُ ﴿٢٠﴾

(२०) तथा न अन्धकार एवं प्रकाश ।[1]

وَلَا الظِّلُّ وَلَا الْحَرُوْرُ ﴿٢١﴾

(२१) तथा न छायाँ एवं न घाम ।[2]

وَمَا يَسْتَوِي الْاَحْيَآءُ وَلَا الْاَمْوَاتُ ؕ اِنَّ اللّٰهَ يُسْمِعُ مَنْ يَّشَآءُ ۚ وَمَآ اَنْتَ بِمُسْمِعٍ مَّنْ فِي الْقُبُوْرِ ﴿٢٢﴾

(२२) तथा जीवित एवं मृत समान हुनसक्दैन,[3] तथा अल्लाह (तआला) जसलाई चाहन्छ सुनाइदिन्छ[4] तथा तपाईं तिनीहरुलाई सुनाउन सक्नुहुन्न जो चिहानहरुमा छन् ।[5]

اِنْ اَنْتَ اِلَّا نَذِيْرٌ ﴿٢٣﴾

(२३) तपाईं त केवल तर्साउने हुनुहुन्छ ।[6]

اِنَّآ اَرْسَلْنٰكَ بِالْحَقِّ بَشِيْرًا وَّنَذِيْرًا ؕ وَاِنْ مِّنْ اُمَّةٍ اِلَّا خَلَا فِيْهَا نَذِيْرٌ ﴿٢٤﴾

(२४) हामीले नै तपाईंलाई सत्य शुभ-सूचना सुनाउने तथा तर्साउनेवाला बनाएर पठाएका छौं, तथा कुनै समुदाय यस्तो भएन जसमा कुनै तर्साउनेवाला नगुज्रेको होस् ।

وَاِنْ يُّكَذِّبُوْكَ فَقَدْ كَذَّبَ الَّذِيْنَ

(२५) तथा यदि यिनीहरु तपाईंलाई झुठ्लाइदिन्छन् त जो यिनीभन्दा पूर्व गुज्रेका छन् उनीहरुले पनि

[1]अन्धासित अभिप्राय काफ़िर तथा आँखा भएकासित ईमानवाला, अँध्याराहरुसित अनृत तथा प्रकाशसित सत्य तात्पर्य छ । असत्य (अनृत) को कैयन्प्रकार छन्, यसकारण त्यसका लागि बहुवचनको तथा सत्य अनेक छैन, यसकारण त्यसका लागि एक वचनको रुप प्रयोग गऱ्यो ।

[2]यो पुण्य तथा यातना अथवा स्वर्ग तथा नरकको उदाहरण हो ।

[3]जीवितसित ईमानवाला तथा मृतसित काफ़िर अथवा ज्ञानी तथा मूर्ख अथवा समझदार एवं नासमझ अभिप्राय छ ।

[4]अर्थात् जसलाई अल्लाह संमार्ग देखाउने हुन्छ तथा स्वर्ग त्यसका भाग्यमा हुन्छ, त्यसलाई तर्क एवं प्रमाण सुन्ने तथा पछि स्वीकार गर्नुको सन्मति प्रदान गरिदिन्छ ।

[5]अर्थात् जुनप्रकार समाधिहरु (चिहानहरु) मा मृतहरुलाई कुनै कुरा सुनाउन सकिदैन, त्यसैप्रकार जसका हृदयहरुलाई कुफ्रले मृत गरिदिएको छ, हे सन्देशवाहक (सल्लल्लाहु अलैहि वसल्लम) तिमी उनीहरुलाई सत्यका कुरा सुनाउन सक्दैनौ । भावार्थ यो भयो कि जुनप्रकार मर्नु र गाडिनुका पश्चात मृत कोही लाभ उठाउन सक्दैन, त्यसैप्रकार काफ़िर तथा मुशरिक जसका भाग्यमा दुर्भाग्य अंकित छ, नियन्त्रण तथा सत्य भाषणबाट उनीहरुलाई लाभ हुँदैन ।

[6]अर्थात् तपाईंको काम मात्र धर्मको प्रचार-प्रसार गर्नु हो, सत्य मार्ग देखाउनु अथवा पथभ्रष्ट बनाउनु अल्लाहका अधिकारमा छ ।

مِن قَبْلِهِمْ جَآءَتْهُمْ رُسُلُهُم بِٱلْبَيِّنَٰتِ وَبِٱلزُّبُرِ وَبِٱلْكِتَٰبِ ٱلْمُنِيرِ ﴿٢٥﴾

झुठ्लाएका थिए, उनका पासमा पनि उनका पैगम्बर चमत्कार, ग्रन्थ एवं स्पष्ट किताबहरु लिएर आएका थिए ।[१]

ثُمَّ أَخَذْتُ ٱلَّذِينَ كَفَرُوا۟ فَكَيْفَ كَانَ نَكِيرِ ﴿٢٦﴾

(२६) अनि मैले ती काफिरहरुलाई समातिहाले त मेरो प्रकोप कस्तो भयो ?[२]

أَلَمْ تَرَ أَنَّ ٱللَّهَ أَنزَلَ مِنَ ٱلسَّمَآءِ مَآءً فَأَخْرَجْنَا بِهِۦ ثَمَرَٰتٍ مُّخْتَلِفًا أَلْوَٰنُهَا ۚ وَمِنَ ٱلْجِبَالِ جُدَدٌۢ بِيضٌ وَحُمْرٌ مُّخْتَلِفٌ أَلْوَٰنُهَا وَغَرَابِيبُ سُودٌ ﴿٢٧﴾

(२७) के तपाईंले यस कुरातिर ध्यान दिनु भएन कि अल्लाह (तआला) ले आकाशबाट पानी पाऱ्यो अनि हामीले त्यसद्वारा विभिन्न रङ्गका फल निकाल्यौं[३] तथा पर्वतहरुका विभिन्न भागहरु छन्, सेतो एवं रातो कि उनका पनि रङ्ग विभिन्न छन् तथा अति गहिरा काला ।[४]

وَمِنَ ٱلنَّاسِ وَٱلدَّوَآبِّ وَٱلْأَنْعَٰمِ مُخْتَلِفٌ أَلْوَٰنُهُۥ كَذَٰلِكَ ۗ إِنَّمَا

(२८) तथा यसैप्रकार मनुष्य तथा जनावर एवं चौपायाहरुमा पनि केही यस्ता छन् कि उनका रङ्ग भिन्न छन् ।[५] अल्लाहसित त्यसका त्यही भक्त

---

[१]ताकि कुनै समुदाय यो भन्न नसकोस् कि हामीलाई त कुफ्र तथा ईमानबारे थाहा नै छैन । यसैकारणले अल्लाहले प्रत्येक समुदायमा नबी पठायो, जस्तो अर्को स्थानमा भन्नुभयो : ﴿وَلَقَدْ بَعَثْنَا فِي كُلِّ أُمَّةٍ رَّسُولًا﴾ (अन-नहल-३६)

[२]कति घोर प्रकोपले उनीहरुलाई समातिहाल्यो तथा उनलाई ध्वस्त तथा नाश गरिदिया ।

[३]अर्थात् जुनप्रकार ईमान्दार तथा काफिर, सदाचारी एवं दूराचारी दुवै प्रकारका मानिस छन्, यसैप्रकार अन्य सृष्टिमा पनि भेद तथा विभिन्नता छ । उदाहरणार्थ, फलहरुका रङ्ग पनि विभिन्न छन्, स्वाद एवं सुगन्धमा पनि परस्पर भिन्न, यहाँसम्मकि एकै फलका पनि कैयन् रङ्ग तथा स्वाद छन् जस्तै खजूर छ, अंगूर छ, स्याउ छ तथा अन्य केही फल छन् ।

[४]यसैप्रकार पर्वत तथा त्यसका भाग अथवा मार्ग विभिन्न रङ्गहरुका छन्, सेता, राता तथा अति घोर काला । جُدَدٌ बहुवचन हो جدة को मार्ग अथवा रेखाहरु । غرابيب बहुवचन हो, غِرْبِيب का, तथा أسود - سُودٌ (कालो) को बहुवचन हो । जब काला रङ्गको गम्भीरतालाई व्यक्त गर्नुछ भने أسود का साथ غربيب को शब्द प्रयोग गरिन्छ । أسود غربيب को अर्थ हुन्छ, अति गहिरा काला ।

[५]अर्थात् मानव तथा पशु पनि सेता, काला तथा पहेंला वर्णका हुन्छन् ।

يَخْشَى اللّٰهَ مِنْ عِبَادِهِ الْعُلَمٰٓؤُا ۗ اِنَّ اللّٰهَ عَزِيْزٌ غَفُوْرٌ ﴿٢٨﴾

तर्सन्छन् जो ज्ञान राख्दछन् ।[1] वास्तवमा अल्लाह (तआ़ला) अत्यन्त महान क्षमाशील छ ।[2]

اِنَّ الَّذِيْنَ يَتْلُوْنَ كِتٰبَ اللّٰهِ وَاَقَامُوا الصَّلٰوةَ وَاَنْفَقُوْا مِمَّا رَزَقْنٰهُمْ سِرًّا وَّعَلَانِيَةً يَّرْجُوْنَ تِجَارَةً لَّنْ تَبُوْرَ ﴿٢٩﴾

(२९) जो मानिस अल्लाहको किताबको पाठ गर्दछन्[3] तथा नमाज़ नियमित रुपमा पढ्छन्[4] तथा जे-जति हामीले उनलाई प्रदान गरेका छौं त्यसबाट गुप्त तथा स्पष्टरुपले खर्च गर्दछन्,[5] उनी यस्ता व्यापारका उम्मेदवार हुन् जो कहिल्यै हानिमा हुनेछैन ।[6]

[1]अर्थात् अल्लाहका यी सामर्थ्यहरु तथा रचनात्मक गुणलाई तिनै जान्न एवं बुझ्न सक्छन् जो ज्ञानी छन्, यसबाट तात्पर्य किताब (पवित्र कुर्आन) हदीस तथा ईश्वरीय भेदहरुको ज्ञान छ तथा जति उनीहरुलाई प्रभुको आध्यात्मिक ज्ञान प्राप्त हुन्छ त्यति नै उनी प्रभुसित तर्सन्छन् मानौं जसमा अल्लाहको भय छैन बुझ्नुस् कि सही ज्ञानबाट पनि तिनी बञ्चित छन् । सुफ्यान सौरी भन्नुहुन्छ कि ज्ञानीहरु त तीन प्रकार छन् । अल्लाहका ज्ञानी तथा अल्लाहका आदेशका ज्ञानी, यो त्यो हो जो अल्लाहसित तर्सन्छ तथा त्यसका आदेश तथा सीमाहरुलाई जान्दछ । दोस्रो मात्र अल्लाहको ज्ञानी, जो अल्लाहसित त तर्सन्छ किन्तु त्यसका सीमाहरु तथा त्यसका आदेशहरुलाई जान्दैन । तेस्रो मात्र अल्लाहका आदेशहरुको ज्ञानी, जो त्यसका निर्धारित सीमा एवं आदेशहरुसित अवगत छ किन्तु अल्लाहका भयबाट शून्य छ । (इब्ने क़सीर)

[2]यो प्रभुसित भय राख्नुको कारण हो कि त्यो यस कुरामाथि सामर्थ्यवान छ कि अवज्ञाकारीलाई दण्ड दिनसक्छ तथा क्षमा-याचना गर्नेका दोष क्षमा गर्न सक्दछ ।

[3]अल्लाहको किताबसित तात्पर्य पवित्र ईशवाणी कुर्आन हो, 'तिलावत (पाठ) गर्दछन्' अर्थात् नित्य त्यसको व्यवस्था गर्दछन् ।

[4]नमाज़को स्थापनाको अभिप्राय हुन्छ नमाज़ त्यस ढङ्गले पढ्नु जो अभीष्ट (त्यसको उद्देश्य) हो, अर्थात निर्धारित समय तथा त्यसका अनिवार्य कर्महरुमा सन्तुलन तथा विनम्रता एवं विनयका प्रयोजनका साथ पढ्नु ।

[5]अर्थात् रात र दिन खुला तथा गोप्य दुबै ढङ्गले आवश्यकता अनुसार खर्च गर्दछन् । केही विद्वानका निकट गोप्यसित ऐच्छिक दान तथा खुलासित अनिवार्य दान (ज़कात) अभिप्राय छ ।

[6]अर्थात् यस्ता मानिसहरुको फल अल्लाहकहाँ निश्चित छ जसमा मन्द अथवा कमीको सम्भावना छैन ।

(३०) ताकि उनका पारिश्रमिक पूर्णरुपले उनलाई दिइयोस् तथा उनलाई आफ्नो कृपाले अझ अधिक प्रदान गरोस् ।[१] निःसन्देह त्यो अत्यन्त क्षमाशील गुणग्राही छ ।[२]

لِيُوَفِّيَهُمْ أُجُورَهُمْ وَيَزِيدَهُم مِّن فَضْلِهِ ۚ إِنَّهُ غَفُورٌ شَكُورٌ ﴿٣٠﴾

(३१) तथा यो किताब जुन हामीले तपाईंका पासमा प्रकाशनाद्वारा पठाएका छौं यो पूर्णरुपमा सत्य छ[३] जो आफूभन्दा पूर्वका किताबहरुको पनि पुष्टि गर्दछ ।[४] निःसन्देह अल्लाह (तआला) आफ्ना भक्तहरुको विषयमा पूर्णरुपमा जानकारी राख्नु राम्ररी देख्नेवाला छ ।[५]

وَالَّذِي أَوْحَيْنَا إِلَيْكَ مِنَ الْكِتَابِ هُوَ الْحَقُّ مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ ۗ إِنَّ اللَّهَ بِعِبَادِهِ لَخَبِيرٌ بَصِيرٌ ﴿٣١﴾

(३२) अनि (यस) किताब[६] को उत्तराधिकारी

ثُمَّ أَوْرَثْنَا الْكِتَابَ الَّذِينَ اصْطَفَيْنَا

[१] لِيُوَفِّيَهُمْ सम्बन्धित छ لن تبور सित, अर्थात् यो व्यापार मन्दीबाट यसकारण सुरक्षित छ कि अल्लाह पुण्यका कर्महरुका लागि पूरा फल प्रदान गर्नेछ, अथवा लुप्त क्रियासित सम्बन्धित छ कि उनी पुण्यका कर्म यसकारण गर्दछन् अथवा अल्लाहले यसतिर मार्ग देखायो ताकि उनीहरुलाई प्रतिफल प्रदान गरोस् ।

[२]यो توفية तथा अधिकताको कारण हो, कि त्यो आफ्ना ईमान भएका भक्तहरुलाई क्षमा गर्नेछ यस प्रतिबन्धका साथ कि उनीहरुले स्वच्छ मनले क्षमा माँगून्, उनको आज्ञाकारिता एवं पुण्यका कर्महरुको गुणग्राही छ यसकारण त्यसले केवल प्रतिफल नै दिने छैन बरु आफ्नो दया तथा अनुग्रहबाट अझ अधिक पनि प्रदान गर्नेछ ।

[३]अर्थात् जसमा तिम्रा लागि तथा तिम्रा समुदायका लागि कार्यरत हुनु अनिवार्य छ ।

[४]आदि ग्रन्थ तौरात तथा इंजील आदिको, यो यस कुराको प्रमाण हो कि पवित्र कुर्आन त्यस अल्लाहद्वारा अवतरित गरिएको हो जसले पूर्वका धर्मग्रन्थ अवतरित गरेको थियो, त्यसैले त दुबै एक-अर्काको समर्थन एवं पुष्टि गर्दछन् ।

[५]यो त्यसका ज्ञान तथा जानकारीकै परिणाम हो कि उसले नवीन धर्मग्रन्थ अवतरित गरिदियो किनकि त्यो जान्दछ कि आदिग्रन्थ हेरफेर तथा परिवर्तनबाट ग्रस्त भइसकेका छन् र उनी मार्गदर्शनका योग्य छैनन् ।

[६]किताबसित अभिप्राय पवित्र कुर्आन तथा निर्वाचित भक्तहरुसित मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको समुदाय हो, अर्थात् हामीले यस कुर्आनको उत्तराधिकारी मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमका अनुयायीहरुलाई बनाएका छौं, यो लगभग त्यही भावार्थ हो जो आयत ﴿وَكَذَٰلِكَ جَعَلْنَاكُمْ أُمَّةً وَسَطًا لِّتَكُونُوا شُهَدَاءَ عَلَى النَّاسِ﴾ अल-बकर:-१४३) को हो ।

مِنْ عِبَادِنَا ۚ فَمِنْهُمْ ظَالِمٌ لِّنَفْسِهِۦ وَمِنْهُم مُّقْتَصِدٌ وَمِنْهُمْ سَابِقٌۢ بِالْخَيْرَٰتِ بِإِذْنِ اللَّهِ ۚ ذَٰلِكَ هُوَ الْفَضْلُ الْكَبِيرُ ﴿٣٢﴾

हामीले ती मानिसहरुलाई बनायौं जसलाई हामीले आफ्ना भक्तहरु मध्येबाट रोज्यौं । अनि केही त आफ्ना प्राणहरुमाथि अत्याचार गर्नेहरु छन् ।[१] तथा केही मध्यम श्रेणीका छन् ।[२] तथा केही उनीहरुमध्ये अल्लाहको सन्मतिले पुण्यमा उन्नति गर्दै जान्छन् ।[३] यो ठूलो कृपा हो ।[४]

جَنَّٰتُ عَدْنٍ يَدْخُلُونَهَا يُحَلَّوْنَ فِيهَا مِنْ أَسَاوِرَ مِن ذَهَبٍ وَلُؤْلُؤًا ۖ وَلِبَاسُهُمْ فِيهَا حَرِيرٌ ﴿٣٣﴾

(३३) सधैं रहनका लागि ती बगैंचाहरु छन् जसमा यिनीहरु प्रवेश गर्नेछन्,[५] त्यसमा उनीहरु स्वर्णका कङ्गन तथा मोती पहिराइने छन् तथा वस्त्र त्यहाँ उनका लागि रेशमका हुनेछन् ।[६]

---

[१]मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमका अनुयायीहरुका तीन प्रकार बताएका छन्, यो प्रथम प्रकार हो जसबाट अभिप्राय यस्ता मानिसहरु हुन् जो केही अनिवार्य कर्तव्यहरुमा आलस्य तथा केही निषेधित कर्म गरिहाल्छन्, अथवा केहीका यहाँ तात्पर्य उनीहरु हुन् जो साना-साना त्रुटिहरु गर्दछन् । उनीहरुलाई आफूमाथि अत्याचार गर्नेहरु यसकारण भन्यो कि उनी आफ्ना केही आलस्यका कारण स्वयंलाई त्यस उच्च पदबाट बञ्चित गर्नेछन् जुन शेष दुई प्रकारहरुलाई प्राप्त हुनेछन् ।

[२]यो दोस्रो प्रकार हो अर्थात् जो उस्तै-उस्तै प्रकारको कर्म गर्दछन्, अथवा केहीका निकट ती हुन् जो कर्तव्यको पालन त गर्दछन्, निषेधहरुका त्यागी हुन् किन्तु कहिले उत्तमको त्याग तथा केही अवैध कर्म पनि उनीबाट हुनजान्छ, अथवा उनीहरु हुन् जो पुनीत त छन् किन्तु त्यसमा अघि-अघि छैनन् ।

[३]यी तिनीहरु हुन् जो धर्मका विषयमा पछिल्ला दुवैबाट अग्रगामी छन् ।

[४]अर्थात् किताब (धर्मशास्त्र) को उत्तराधिकारी गर्नु तथा प्रतिष्ठा एवं अनुग्रहमा श्रेष्ठ (निर्वाचित) गर्नु हो ।

[५]केही विद्वानहरु भन्छन् कि स्वर्गमा केवल अग्रगामी जानेछन् किन्तु यो सही छैन कुर्आनको पूर्व वाक्यक्रम यस कुराको अभियाची छ कि तीनै प्रकार स्वर्गवासी हुन् । अर्को कुरा हो कि अग्रगामी बिना हिसाब तथा मध्यवर्ती सरल हिसाबका पश्चात एवं अत्याचारी सिफारिशबाट अथवा दण्ड भोग्नुका पश्चात स्वर्गमा जानेछन् जस्तो कि हदीसहरुबाट स्पष्ट छ । मुहम्मद बिन हनफ़ियाको कथन छ कि यो दयाका पात्र गिरोह हो । अत्याचारी अर्थात् पापीलाई क्षमा प्राप्त हुनेछ, मध्यम अल्लाहकहाँ स्वर्गमा हुनेछ तथा पुण्यमा अग्रसर हुने उच्च श्रेणीमा हुनेछ । (फ़तहुल क़दीर)

[६]हदीसमा वर्णित छ कि रेशम तथा दीबाज संसारमा नलगाउ, यसकारण कि जसले यसलाई संसारमा लगाउने छ, त्यसलाई त्यसले आख़िरत (परलोक) मा

وَقَالُوا الْحَمْدُ لِلَّهِ الَّذِيٓ أَذْهَبَ عَنَّا الْحَزَنَ ۖ إِنَّ رَبَّنَا لَغَفُورٌ شَكُورٌ ﴿٣٤﴾

(३४) तथा भन्नेछन् कि अल्लाहको लाख-लाख धन्य छ जसले हामीबाट शोक टाढा गरिदियो । यो नि:सन्देह हाम्रो प्रभु अत्यन्त क्षमाशील एवं कदर गर्नेवाला छ ।

الَّذِيٓ أَحَلَّنَا دَارَ الْمُقَامَةِ مِن فَضْلِهِۦ لَا يَمَسُّنَا فِيهَا نَصَبٌ وَلَا يَمَسُّنَا فِيهَا لُغُوبٌ ﴿٣٥﴾

(३५) जसले हामीलाई आफ्नो कृपा (अनुग्रह) बाट सधैं रहने स्थानमा ल्याइ उतार्‍यो, जहाँ न हामीलाई कुनै कठिनाई पुग्नेछ तथा न हामीलाई कुनै थकान पुग्नेछ ।

وَالَّذِينَ كَفَرُوا لَهُمْ نَارُ جَهَنَّمَ لَا يُقْضَىٰ عَلَيْهِمْ فَيَمُوتُوا وَلَا يُخَفَّفُ عَنْهُم مِّنْ عَذَابِهَا ۚ كَذَٰلِكَ نَجْزِي كُلَّ كَفُورٍ ﴿٣٦﴾

(३६) तथा जो मानिस काफ़िर छन् उनका लागि नरक्को अग्नि छ, न त उनलाई मृत्यु नै आउनेछ कि मरिहालून् तथा न नरकको यातना नै उनीबाट कम गरिनेछ । हामी प्रत्येक काफ़िरलाई यस्तै यातना दिन्छौं ।

وَهُمْ يَصْطَرِخُونَ فِيهَا رَبَّنَآ أَخْرِجْنَا نَعْمَلْ صَالِحًا غَيْرَ الَّذِي كُنَّا نَعْمَلُ ۚ أَوَلَمْ نُعَمِّرْكُم مَّا يَتَذَكَّرُ فِيهِ مَن تَذَكَّرَ وَجَآءَكُمُ النَّذِيرُ ۖ

(३७) तथा उनीहरु यसमा चिच्याउनेछन् कि हाम्रा प्रभु ! हामीलाई निकालिहाल हामीले राम्रा कर्म गर्नेछौं ती कर्महरुका विपरीत जो गर्ने गर्दथ्यौं[1] (अल्लाह तआलाले भन्नेछ) कि के हामीले तिमीलाई यति आयु दिएका थिएनौं कि जसलाई सम्भन् हुन्थ्यो[2] त्यो सम्भन सक्थ्यो तथा तिम्रा पासमा

लगाउने छैन । (सहीह बुख़ारी तथा सहीह मुस्लिम, किताबु लिबास)

[1]अर्थात् अरुहरुको इबादतको साटो तिम्रो इबादत तथा अवज्ञाका स्थानमा आज्ञाको पालन गर्नेछ ।

[2]यसबाट अभिप्राय कति आयु छ ? भाष्यकारहरुले विभिन्न आयुका वर्णन गरेका छन् । केहीले केही हदीसहरुबाट तर्क दिंदै भनेका छन् कि ६ वर्षको आयु तात्पर्य छ । (इब्ने क़सीर) किन्तु हाम्रा विचारले आयुको निर्धारण सही छैन, यसकारण कि आयु विभिन्न हुन्छ, कोही युवा अवस्थामा, कोही अर्धबैंस आयुमा तथा कोही बृद्धावस्थामा मर्दछ, अनि यो समय पनि व्यतीत क्षणको जस्तो कम हुँदैन बरु प्रत्येक अवधि विशेषत: लामो हुन्छ ।

فَذُوقُوا فَمَا لِلظَّالِمِينَ مِن نَّصِيرٍ ﴿٣٧﴾

तर्साउनेवाला पनि पुगेको थियो[1] त स्वाद चाख कि (यस्ता) अत्याचारीहरुका लागि कोही सहायता गर्नेछैन ।

إِنَّ اللَّهَ عَالِمُ غَيْبِ السَّمَاوَاتِ وَالْأَرْضِ ۚ إِنَّهُ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ﴿٣٨﴾

(३८) वस्तुतः अल्लाह (तआला) जान्ने ज्ञाता छ आकाशहरु तथा धर्तीको गुप्त वस्तुहरुको,[2] निःसन्देह त्यही ज्ञाता छ छातिभित्रका कुराहरुको ।[3]

هُوَ الَّذِي جَعَلَكُمْ خَلَائِفَ فِي الْأَرْضِ ۚ فَمَن كَفَرَ فَعَلَيْهِ كُفْرُهُ ۖ

(३९) त्यही यस्तो छ जसले तिमीलाई धर्तीमा बसायो, त जुन व्यक्तिले कुफ्र (इन्कार) गर्नेछ त्यसका कुफ्रको बोझ उसैमाथि पर्नेछ । तथा

---

उदाहरणार्थ, एवं यौवनकाल वयस्क हुनुबाट अर्धबैंस हुनुसम्म तथा अर्धबैंस हुनुका समय बुढेससम्म तथा बुढेसको मृत्युसम्म रहन्छ । कसैलाई सोच-विचार, शिक्षा ग्रहण गर्नु तथा प्रभावित हुनका लागि केही वर्ष, कसैलाई त्यसभन्दा अधिक तथा कसैलाई यसभन्दा पनि अधिक समय प्राप्त हुन्छ, तथा सबैसित यो प्रश्न गर्नु सही हुनेछ कि हामीले तिमीलाई यति आयु दियौं अनि तिमीले सत्यलाई बुझ्न तथा त्यसलाई ग्रहण गर्न प्रयास किन गरेनौ ?

[1]यसबाट अभिप्राय अन्तिम ईशदूत मोहम्मद सल्लल्लाहु अलैहि वसल्लम हुन्, अर्थात स्मरण गराउन तथा शिक्षा दिनका लागि ईशदूत तथा उनका धर्ममञ्चका उत्तराधिकारी ज्ञानी जन तथा प्रचारक तिम्रा पासमा आए किन्तु तिमीले समझ-बुझले काम गरेनौ न सत्यका प्रचारकहरुका कुराहरुतिर ध्यान दियौ ।

[2]यहाँ यसको चर्चाबाट यो पनि उद्देश्य हुनसक्छ कि तिमी पुनः संसारमा जानुको कामना गरिराखेका छौ तथा दावा गरिराखेका छौ कि अब अवहेलनाको सट्टा आज्ञापालन तथा शिर्क (द्वैय) को स्थानमा तौहीद (अद्वैत) लाई अप्नाउनेछौ, किन्तु हामीलाई ज्ञान छ कि तिमी यस्तो गर्नेछैनौ । तिमीलाई यदि संसारमा फेरि पठाइन्छ त तिमी त्यही सबै कुरा गर्नेछौ जो पहिला गर्दैआइरहेका छौ, जस्तो अन्य स्थानमा भन्नुभयो :﴿وَلَوْ رُدُّوا لَعَادُوا لِمَا نُهُوا عَنْهُ﴾ (अल-अनआम-२८) "यदि यिनीहरुलाई पुनः जगत्मा पठाइन्छ भने उनी त्यही कर्म गर्नेछन् जसबाट उनलाई रोकिएको थियो ।"

[3]यो पछिल्लो कुरोको कारण हो अर्थात् परमेश्वर (अल्लाह तआला) लाई आकाश तथा धर्तीका गुप्त कुराको ज्ञान किन नहोस् जबकि त्यो अन्तर्यामी मनका कुराहरु तथा गुप्त कुराहरुसित अवगत छ ।

وَلَا يَزِيدُ الْكَٰفِرِينَ كُفْرُهُمْ عِندَ رَبِّهِمْ إِلَّا مَقْتًا ۖ وَلَا يَزِيدُ الْكَٰفِرِينَ كُفْرُهُمْ إِلَّا خَسَارًا ﴿٣٩﴾

काफिरहरुका लागि उनको कुफ्र उनका प्रभुका निकट क्रोध नै बृद्धि गर्नुको कारण बन्दछ तथा काफिरहरुका लागि उनको कुफ्र हानि नै बढाउनुको कारण बन्दछ ।[1]

قُلْ أَرَءَيْتُمْ شُرَكَآءَكُمُ الَّذِينَ تَدْعُونَ مِن دُونِ اللَّهِ أَرُونِي مَاذَا خَلَقُوا مِنَ الْأَرْضِ أَمْ لَهُمْ شِرْكٌ فِي السَّمَٰوَٰتِ أَمْ ءَاتَيْنَٰهُمْ كِتَٰبًا فَهُمْ عَلَىٰ بَيِّنَتٍ مِّنْهُ ۚ بَلْ إِن يَعِدُ الظَّٰلِمُونَ بَعْضُهُم بَعْضًا إِلَّا غُرُورًا ﴿٤٠﴾

(४०) (तपाईं) भन्नुस् कि तिमी आफ्ना (निर्धारित गरिएका) साझेदारहरुको हाल त भन जसलाई तिमी अल्लाहका अतिरिक्त पुकार्ने गर्दछौ । अर्थात् मलाई यो भन कि उनीहरुले धर्तीको कुनचाहिं (भाग) बनाएका छन् अथवा उनको आकाशमा केही साझा छ, अथवा हामीले उनलाई कुनै किताब प्रदान गरेका छौं कि उनी त्यसका प्रमाणमा दृढ हुन्छन्,[2] बरु यी अत्याचारी एक-अर्कासित केवल धोकाका कुराहरुको वाचा गर्दै आउँछन् ।[3]

إِنَّ اللَّهَ يُمْسِكُ السَّمَٰوَٰتِ وَالْأَرْضَ

(४१) निश्चित कुरो यो हो कि अल्लाह (तआला) आकाशहरु एवं धर्तीलाई थामेको छ कि उनी

[1]अर्थात् अल्लाहका समक्ष कुफ्रले कुनै लाभ पुऱ्याउने छैन बरु यसबाट अल्लाहका क्रोध तथा अप्रसन्नतामा पनि अधिकता हुनेछ तथा मनुष्यको आफ्नो क्षति पनि अधिक ।

[2]अर्थात् हामीले उनीमाथि कुनै किताब (धर्मशास्त्र) अवतरित गरेका छौं, जसमा यो अंकित छ कि मेरा पनि साझी छन्, जो आकाश तथा धर्तीको रचनामा भागीदार तथा साझेदार छन् ।

[3]अर्थात् यिनीमध्ये कुनै कुरा पनि छैन, बरु यिनी परस्पर एक-अर्कालाई पथभ्रष्ट गर्दैआएका छन् । यिनका अगुवा तथा पीर भन्दथे कि यी पूज्य (देवी, देवता एवं समाधिस्थल) उनीहरुलाई लाभ पुऱ्याउने छन् तथा उनलाई अल्लाहका समीप गरिदिनेछन् तथा उनको (सिफारिश) (अभिस्तावना) गर्नेछन् । अथवा यी कुरा शैतान मुशरिकहरु (अनेकेश्वरवादीहरु) सित भन्दथे, अथवा यसबाट तात्पर्य त्यो वाचा हो जसलाई उनी एक-अर्काका अगाडी गर्दथे, कि उनी मुसलमानहरुमाथि विजय पाउनेछन्, जसबाट उनलाई आफ्ना कुफ्र (इन्कार) मा अडिग रहनका लागि प्रोत्साहन प्राप्त हुन्थ्यो ।

أَن تَزُولَا ۚ وَلَئِن زَالَتَا إِنْ أَمْسَكَهُمَا مِنْ أَحَدٍ مِّن بَعْدِهِ ۚ إِنَّهُ كَانَ حَلِيمًا غَفُورًا ﴿٤١﴾

यताउता नसरुन्[1] तथा यदि उनी सर्छन् भने अल्लाहका अतिरिक्त कोही उनलाई थाम्न पनि सक्दैन ।[2] त्यो अत्यन्त सहनशील क्षमा गर्नेवाला छ ।[3]

وَأَقْسَمُوا بِاللَّهِ جَهْدَ أَيْمَانِهِمْ لَئِن جَاءَهُمْ نَذِيرٌ لَّيَكُونُنَّ أَهْدَىٰ مِنْ إِحْدَى الْأُمَمِ ۖ فَلَمَّا جَاءَهُمْ

(४२) तथा यी काफ़िरहरुले ठूलो पक्का सौगन्ध खाएका थिए कि यदि उनका पासमा कोही तर्साउनेवाला आयो भने उनी प्रत्येक समुदायभन्दा अधिक मार्गदर्शन प्राप्त गर्ने हुनेछन् ।[4] अनि

---

[1] كَرَاهَةَ أَن تَزُولَا अथवा لِئَلَّا تَزُولَا यो अल्लाहको पूर्ण सामर्थ्य तथा कारीगरीको वर्णन हो । केही ज्ञाताहरुले भने कि अभिप्राय यो हो कि उनका शिर्कको माँग त यो हो कि आकाश तथा धर्ती आफ्ना स्थितिमा स्थिर नरहून् वरु टुट-फुटको शिकार बनून्, जस्तो आयत ﴿تَكَادُ السَّمَاوَاتُ يَتَفَطَّرْنَ مِنْهُ وَتَنشَقُّ الْأَرْضُ وَتَخِرُّ الْجِبَالُ هَدًّا ۞ أَن دَعَوْا لِلرَّحْمَٰنِ وَلَدًا﴾ (मरियम-९०-९१) को भावार्थ छ ।

[2] यो अल्लाहका पूर्ण सामर्थ्यका साथ त्यसको पूर्ण दया हो कि त्यसले आकाश तथा धर्तीलाई थामेको छ र उनीहरुलाई आफ्ना स्थानबाट हिंड्न-डुल्न दिदैन अन्यथा एकैछिनमा विश्वको व्यवस्था अस्त-व्यस्त हुन जान्थ्यो, किनकि यदि त्यसले उनीहरुलाई थामेर नराखोस् तथा आफ्नो स्थानबाट परिवर्तित गरिदिन्छ भने अल्लाहका अतिरिक्त कोही छैन जो उनलाई थाम्न सकोस् । إِنْ أَمْسَكَهُمَا मा إِنْ "छैन" का अर्थमा छ अल्लाहले आफ्ना यस अनुग्रह तथा लक्षणको चर्चा अर्को स्थानमा पनि गरेको छ, जस्तै ﴿وَيُمْسِكُ السَّمَاءَ أَن تَقَعَ عَلَى الْأَرْضِ إِلَّا بِإِذْنِهِ﴾ "केही आकाशलाई धर्तीमाथि खस्नबाट रोकेको छ, किन्तु जब उसको आदेश हुनेछ ।" (अल्-हज्ज-६५) तथा ﴿وَمِنْ آيَاتِهِ أَن تَقُومَ السَّمَاءُ وَالْأَرْضُ بِأَمْرِهِ﴾ "उसका चिन्हहरुमध्ये हो कि आकाश तथा धर्ती त्यसका आदेशले स्थापित छन् ।" (अर-रूम-२५)

[3] यति सामर्थ्यहरुका पश्चात त्यो सहनशील छ, आफ्ना भक्तहरुलाई देख्दछ कि उनी कुफ़्र तथा शिर्क एवं अवज्ञा गरिराखेका छन् तैपनि उनको पकडमा शीघ्रता गर्दैन वरु ढील (छुट) दिन्छ, तथा क्षमाशील पनि छ, कोही क्षमा माँग्दछ र त्यसका सदनमा नतमस्तक हुन्छ, पश्चाताप तथा क्षमा-याचना एवं लज्जा देखाउँछ त त्यसले क्षमा गरिदिन्छ ।

[4] यसमा अल्लाह तआला भन्दछ कि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई नबी बनाएर पठाउनुभन्दा पहिला यी मूर्तिहरुका पूजारी कसम खाई-खाई भनिराखेका थिए कि यदि हामीतिर कोही ईशदूत आयो भने हामीले त्यसको स्वागत गर्नेछौं तथा उसमाथि ईमान स्थापित गर्नुमा एउटा आदर्श कर्म प्रस्तुत गर्नेछौं । यो विषय अन्य स्थानहरुमा पनि वर्णित छ, जस्तै सूरः अनआम-१५६, १५७ तथा

نَذِيرٌ مَّا زَادَهُمْ إِلَّا نُفُورًا ﴿٤٢﴾

जब उनीकहाँ एउटा पैग़म्बर आइपुगे[1] त उनको घृणामा नै प्रगति भयो ।

اسْتِكْبَارًا فِي الْأَرْضِ وَمَكْرَ السَّيِّئِ ۚ وَلَا يَحِيقُ الْمَكْرُ السَّيِّئُ إِلَّا بِأَهْلِهِ ۚ فَهَلْ يَنظُرُونَ إِلَّا سُنَّتَ الْأَوَّلِينَ ۚ فَلَن تَجِدَ لِسُنَّتِ اللَّهِ تَبْدِيلًا ۖ وَلَن تَجِدَ لِسُنَّتِ اللَّهِ تَحْوِيلًا ﴿٤٣﴾

(४३) संसारमा आफूलाई ठूला ठान्नुका कारण[2] तथा उनका नराम्रा प्रयत्नहरुका कारण[3] तथा नराम्रा प्रयत्न गर्नेहरुको दण्ड ती प्रयत्न गर्नेहरुलाई नै भोग्नुपर्दछ,[4] त के यिनीहरु त्यसै नीतिको प्रतीक्षामा छन् जो पूर्वका मानिसहरुसँग हुँदै आएको छ ।[5] तसर्थ तपाईं अल्लाहको रीतिमा कहिल्यै परिवर्तन पाउनु हुनेछैन,[6] तथा तपाईं अल्लाहको रीतिलाई कहिल्यै स्थान्तरित भइराखेको पाउनु हुनेछैन ।

---

सूर: अनआम-१५६, १५७ तथा सूर: अस्साफ़ात-१६७-१७०)

[1]अर्थात् मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम उनीतिर नबी बनेर आए जसका लागि उनी कामना गरिराखेका थिए ।

[2]अर्थात् तपाईंको नबूअत (दूतत्व) मा ईमान ल्याउनु (विश्वास गर्नु) का स्थानमा इन्कार एवं विरोधको मार्ग अहंकार एवं दुष्टताका कारण अप्नाए ।

[3]तथा नराम्रो उपाय अर्थात् धोखा-धाडी एवं नराम्रा कर्मका कारण गरे ।

[4]अर्थात् उनीहरु (धोखे-बाजी) गर्दछन्, किन्तु यो जान्दैनन् कि नराम्रा उपायको परिणाम नराम्रो हुन्छ, तथा त्यसको अन्ततः धोकेबाजहरुमाथि नै पर्दछ ।

[5]अर्थात् के यिनीहरु आफ्ना कुफ्र, शिर्क तथा रसूलका विरोध एवं मुसलमानहरुलाई दुख पुऱ्याउनमा अडिग रहेर यस कुराको प्रतिज्ञा गरिराखेका छन् कि उनीहरुलाई पनि यसैप्रकार नाश गरियोस् जुनप्रकार पछिल्ला समुदायहरुलाई ध्वस्त गरियो ?

[6]बरु यो यसैप्रकार प्रचलित छ तथा प्रत्येक भुठ्लाउनेको भाग्य विनाश छ, अथवा बदलिनबाट तात्पर्य यो हो कि कोही अल्लाहको यातनालाई दयाबाट बदलिनमा सामर्थ्यवान छैन ।

[7]अर्थात् कोही अल्लाहका प्रकोपलाई हटाउनेवाला अथवा त्यसको दिशा परिवर्तित गर्नेवाला छैन, अर्थात् जुन समुदायलाई अल्लाह प्रकोपले ध्वस्त गर्न चाहन्छ । कोही त्यसको मुख कुनै अन्य समुदायतिर फर्काइदेओस्, कसैमा त्यो शक्ति छैन ।

أَوَلَمْ يَسِيرُوا فِي الْأَرْضِ فَيَنظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِينَ مِن قَبْلِهِمْ وَكَانُوا أَشَدَّ مِنْهُمْ قُوَّةً ۚ وَمَا كَانَ اللَّهُ لِيُعْجِزَهُ مِن شَيْءٍ فِي السَّمَاوَاتِ وَلَا فِي الْأَرْضِ ۚ إِنَّهُ كَانَ عَلِيمًا قَدِيرًا ﴿٤٤﴾

(४४) के यिनीहरु धर्तीमा हिंड्डुल गरेनन् जसमा उनीहरु देख्दथे कि जो मानिस उनीभन्दा पूर्व गुज्रेका छन् उनको परिणाम के भयो, यद्यपि शक्तिमा उनीहरु यिनीभन्दा अधिक थिए, तथा अल्लाह यस्तो छैन कि कुनै वस्तु त्यसलाई हराउन सकोस् न आकाशहरुमा तथा न धर्तीमा त्यो अत्यन्त ज्ञान भएको सामर्थ्यवान छ ।

وَلَوْ يُؤَاخِذُ اللَّهُ النَّاسَ بِمَا كَسَبُوا مَا تَرَكَ عَلَىٰ ظَهْرِهَا مِن دَابَّةٍ وَلَٰكِن يُؤَخِّرُهُمْ إِلَىٰ أَجَلٍ مُّسَمًّى ۖ فَإِذَا جَاءَ أَجَلُهُمْ فَإِنَّ اللَّهَ كَانَ بِعِبَادِهِ بَصِيرًا ﴿٤٥﴾

(४५) तथा यदि अल्लाह (तआ़ला) मानिसहरुलाई उनका कर्महरुका कारण तुरुन्त समात्न थाल्थ्यो भने समस्त धर्तीमा एउटा प्राणी पनि छाड्दैन्थ्यो,[1] परन्तु अल्लाह (तआ़ला) उनलाई एउटा नियमित समयमा अवसर प्रदान गरिराखेको छ,[2] त जब उनको समय आइपुग्नेछ त अल्लाह (तआ़ला) आफ्ना भक्तहरुलाई स्वयं देखिहाल्नेछ ।[3]

---

यस रीतिका वर्णनसित अभिप्राय अरबका मूर्तिपूजकहरुलाई तर्साउनु हो कि अझै समय छ, उनीहरु कुफ्र (इन्कार) तथा शिर्क (मूर्तिपूजा) लाई त्याग गरी ईमान स्वीकार गरून् अन्यथा उनीहरु अल्लाहको यस रीतिबाट बच्न सक्दैनन् । ढिलो-चाँडो गरी त्यसका चक्रमा पर्नेछन् । कोही यस ईश्वरीय विधानलाई बदल्नमा सामर्थ्यवान छ न अन्य विषयतिर फर्काउनलाई ।

[1]मानिसहरुलाई त उनका पापहरुका प्रतिफल स्वरुप तथा जनावरहरुलाई मानिसहरु त अशुभका कारण । अथवा भावार्थ यो हो कि समस्त जगत्वासीहरुलाई नाश गरिदिन्थ्यो, मानिसहरुलाई पनि तथा जुन पशु तथा आजीविकाहरुका उनीहरु स्वामी छन्, उनलाई पनि । अथवा अभिप्राय यो हो कि आकाशबाट वर्षाको क्रम बन्द गरिदिन्थे जसवाट धर्तीमा हिंड्डुल गर्ने सबै जीवधारी मरिहाल्थे ।

[2]यो नियमित अवधि संसारमा पनि संभव छ तथा प्रलयको दिन त छ नै ।

[3]अर्थात् त्यस दिन उनको लेखा-जोखा लिनेछ तथा प्रत्येकलाई त्यसका कर्महरुको पूरा प्रतिकार दिनेछ । ईमान्दार तथा आज्ञाकारीलाई पुण्य तथा शुभफल तथा काफ़िर एवं अवज्ञाकारीलाई यातना तथा कुफल । यसमा ईमान भएकाहरुका लागि सान्त्वना तथा काफ़िरहरुका लागि चेतावनी एवं धम्की छ ।

## सूरतु यासीन-३६

سُوْرَةُ يٰسٓ

सूरः यासीन* मक्कामा उत्रेको, यसमा त्रियासी आयतहरु एवं पाँच रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाह तआलाको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं कृपालु छ ।

يٰسٓ ﴿١﴾

(१) यासीन ।[1]

وَالْقُرْاٰنِ الْحَكِيْمِ ﴿٢﴾

(२) सौगन्ध छ आदर्श (एवं सुदृढ) कुर्आनको ।[2]

اِنَّكَ لَمِنَ الْمُرْسَلِيْنَ ﴿٣﴾

(३) यी निश्चय तपाईं पैग़म्बरमध्ये हुनुहुन्छ ।[3]

عَلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٤﴾

(४) सोझो मार्गमा हुनुहुन्छ ।[4]

---

*सूरः यासीनको विशेषतामा धेरै रवायतहरु प्रसिद्ध छन् । यिनीहरुमध्ये जस्तै, यो कुर्आनको हृदय हो, यसलाई यसमाथि पढ जो मृत्युका निकट छ, इत्यादि । किन्तु वर्णनक्रम (सनद) का आधारमा कुनै सही छैनन्, केही पूर्णता बनावटी छन् अथवा केही क्षीण (निम्नस्तर) छन् । "कुर्आनका हृदय" भएको रवायत (वर्णन) लाई हदीसमा विशेषज्ञ अल्बानीले बनावटी (रचेको) भन्नुभएको छ । (अज्-जईफ़ा हदीस नम्बर १६९)

[1]केही ज्ञाताहरुले यसको अर्थ "हे मनुष्य" अथवा हे मानव गरेका छन्, कसैले यसलाई नबी सल्लल्लाहु अलैहि वसल्लमको शुभनाम तथा केहीले त्यसलाई अल्लाहका शुभनामहरुमध्ये भनेका छन्, किन्तु यी सबै कथन तर्कहीन (अप्रमाणित) छन् । यो पनि ती हरूफे मुकत्तआत (विभिन्न अक्षरहरु) मध्येबाट छ जसको अर्थ तथा भावार्थ अल्लाहबाहेक कोही जान्दैन ।

[2]अथवा सुदृढ कुर्आनको जो वाक्यक्रम तथा अर्थमा सुदृढ छ, वाव (व) अक्षर सौगन्धका लागि छ । अगाडी शपथको उत्तर छ ।

[3]मुशिरकीन (मूर्तिपूजक) नबी सल्लल्लाहु अलैहि वसल्लमको रिसालत (तपाईंको ईशदूत हुनेकुरो) लाई इन्कार गर्दथे तथा भन्दथे कि ﴿لَسْتَ مُرْسَلًا﴾ अर्रराद-४३ "तिमी त अल्लाहको तर्फबाट सन्देशवाहक नै होइनौ" अल्लाहले उनका उत्तरमा पवित्र कुर्आनको शपथ लिएर भन्नुभयो, "तपाईं निश्चय उसका पैग़म्बरहरुमध्ये हुनुहुन्छ ।" यसमा उहाँ सल्लल्लाहु अलैहि वसल्लमको प्रतिष्ठा एवं महानताको प्रदर्शन छ । यो पनि उहाँका गुण एवं विशेषताहरुमध्ये छ कि अल्लाहले उहाँ सल्लल्लाहु अलैहि वसल्लमको रिसालतलाई प्रमाणित गर्नका लागि शपथ ग्रहण गर्नुभयो । सल्लल्लाहु अलैहि वसल्लम ।

[4]यो اِنَّكَ को दोस्रो 'ख़बर' (विधेय) हो, अर्थात् उहाँ ती पैग़म्बरहरुका पथमा हुनुहुन्छ जो तपाईंभन्दा पहिला गुज्रिसकेका छन्, अथवा यस्ता मार्गमा छन्

تَنۡزِيۡلَ الۡعَزِيۡزِ الرَّحِيۡمِۙ۝٥

(५) यो कुरआन (अल्लाह) प्रभुत्वशाली अत्यन्त दयालुको तर्फबाट अवतरित गरिएको छ ।[1]

لِتُنۡذِرَ قَوۡمًا مَّاۤ اُنۡذِرَ اٰبَآؤُهُمۡ فَهُمۡ غٰفِلُوۡنَ۝٦

(६) ताकि तपाईं यस्ता मानिसहरुलाई सावधान गर्नुस् जसका पूर्वज तर्साइएका थिएनन्, तसर्थ (त्यसैकारणले) यिनीहरु अनभिज्ञ छन् ।[2]

لَقَدۡ حَقَّ الۡقَوۡلُ عَلٰۤى اَكۡثَرِهِمۡ فَهُمۡ لَا يُؤۡمِنُوۡنَ۝٧

(७) उनीहरुमध्ये अधिकतर मानिसहरुमा (यो) कुरो सिद्ध भइसकेको छ, अत: यिनीहरु ईमान स्वीकार गर्नेछैनन् ।[3]

---

जो सोझो एवं लक्ष्य (स्वर्ग) सम्म पुग्नेछ ।

[1]अर्थात् त्यस अल्लाहतिरबाट अवतरित भएको छ जो प्रभुत्वशाली छ, अर्थात् त्यसको इन्कार तथा त्यसका रसूललाई झुठ्लाउनेवालासित बदला लिन सामर्थ्य राख्दछ । رحيم छ अर्थात् जो त्यसमा ईमान स्वीकार गर्नेछ तथा त्यसको भक्त बनिरहने छ त्यसका लागि अत्यन्त दयालु छ ।

[2]अर्थात् तपाईंलाई रसूल यसकारणले बनाइएको छ तथा यो किताब (पवित्र कुरआन) यसकारण अवतरित गरेको छ कि तपाईं त्यस समुदायलाई सावधान गर्नुस् जसमा तपाईंभन्दा पहिला कोही सावधान गर्नेवाला आएन, यसकारण एक समयदेखि तिनी सत्य धर्मबाट अनभिज्ञ छन् । यो विषय अघि पनि कैयन् स्थानहरुमा गुज्रिसकेको छ कि अरबहरुमा आदरणीय इस्माईलका पश्चात नबी सल्लल्लाहु अलैहि वसल्लमभन्दा पहिला सोझै कोही नबी आएन, यहाँपनि त्यसै विषयको वर्णन गरिएको छ ।

[3]जस्तै अबू-जहल, अबू लहब, उत्बा तथा शैबा आदि । कुरा सिद्ध हुनुको अभिप्राय अल्लाह तआलाको यो वचन हो कि "म नरकलाई जिन्न तथा मानिसहरुबाट भरिदिनेछु ।" (अलिफ. लाम. मीम. अस्सजदा-१३) शैतानलाई पनि सम्बोधित गर्दै भन्नुभएको थियो, "म नरकलाई तिमी तथा तिम्रा अनुयायीहरुबाट भरिदिनेछु ।" (साद-८४) अर्थात् यी मानिसहरुले शैतानका पछि लागेर नरकको पात्र बनाइहाले । अल्लाहले त उनीहरुलाई इच्छाको अधिकार एवं स्वाधीनता प्रदान गरेको थियो । किन्तु उनीहरुले यसको गलत प्रयोग गरे तथा यसरी नरकका इन्धन बने यो होइन कि अल्लाहले बलपूर्वक उनलाई ईमानबाट बञ्चित राख्यो किनकि विवश गर्नुको दशामा त उनी दण्डका अधिकारी हुन पाउँदैनथे ।

إِنَّا جَعَلْنَا فِي أَعْنَاقِهِمْ أَغْلَالًا فَهِيَ إِلَى الْأَذْقَانِ فَهُمْ مُقْمَحُونَ ⑧

(८) हामीले उनका गर्दनहरुमा तौक (रिङ) हालिदिएका छौं अनि उनी चिउडोहरुसम्म छन् जसबाट उनका टाउका माथितिर फर्किसकेका छन् ।[1]

وَجَعَلْنَا مِنْ بَيْنِ أَيْدِيهِمْ سَدًّا وَمِنْ خَلْفِهِمْ سَدًّا فَأَغْشَيْنَاهُمْ فَهُمْ لَا يُبْصِرُونَ ⑨

(९) तथा हामीले एक पर्खाल उनका सम्मुख तथा एक पर्खाल उनका पछाडी गरिदिएका छौं,[2] जसबाट हामीले उनलाई ढाकिदियौं[3] तसर्थ उनी देख्न सक्दैनन् ।

وَسَوَاءٌ عَلَيْهِمْ أَأَنْذَرْتَهُمْ أَمْ لَمْ تُنْذِرْهُمْ لَا يُؤْمِنُونَ ⑩

(१०) तथा उनका विषयमा तपाईंबाट तर्साउनु अथवा न तर्साउनु दुबै समान छन्, यिनीहरु ईमान स्वीकार गर्ने छैनन् ।[4]

إِنَّمَا تُنْذِرُ مَنِ اتَّبَعَ الذِّكْرَ وَخَشِيَ الرَّحْمَٰنَ بِالْغَيْبِ ۖ فَبَشِّرْهُ بِمَغْفِرَةٍ وَأَجْرٍ كَرِيمٍ ⑪

(११) तपाईं त केवल यस्तो व्यक्तिलाई तर्साउन सक्नुहुन्छ[5] जो शिक्षाका अनुरुप हिंड्छ तथा रहमान (अल्लाह) सित नदेखिकन तर्सन्छ, तसर्थ तपाईं

[1]जसका कारण यताउता देख्न सक्छन् न टाउको निहुराउन सक्छन् बरु उनीहरु टाउको माथि उचालेको एवं आँखा तल पारेका छन् । यो उनीबाट सत्यलाई स्वीकार नगर्नु तथा व्ययनगर्नुको उपमा हो । यो पनि सम्भव छ कि यो उनको नरकको यातनाको स्थितिको वर्णन होस् । (ऐसरुत्तफ़ासीर)

[2]अर्थात् सांसारिक जीवन उनका लागि सुशोभित गरियो, यो जस्तो उनका अगाडीको पर्खाल (आवरण) हो जसका कारण उनी सांसारिक स्वार्थका अतिरिक्त केही देख्दैनन् तथा यही वस्तु उनका तथा उनका ईमानका बीच यिनै वस्तु पर्खाल छन् । आख़िरतको ध्यान उनका मनमा आउने असम्भव भइहाल्यो, यो मानौं उनका पछाडीको पर्खाल हो जसका कारण उनीहरु क्षमा माँगदछन् न शिक्षा ग्रहण गर्दछन् किनकि परलोकको कुनै भय नै उनका अन्तकरणमा छैन ।

[3]अथवा उनका आँखालाई ढाकिदियो, अर्थात रसूलसित वैमनुष्य तथा त्यसका सत्य उपदेशबाट घृणाले उनका आँखामा पट्टि बाँधिदियो अथवा उनलाई अन्धा गरिदिएको छ, जसबाट उनी देख्न सक्दैनन् । यो उनको दशाको दोस्रो उपमा हो ।

[4]जो आफ्ना कर्तुतहरुका कारण पथभ्रष्टताका त्यस ठाउँमा पुग्छन्, उनलाई सावधान गर्नु व्यर्थ हुन्छ ।

[5]अर्थात् सावधान गर्नबाट केवल उसलाई लाभ पुग्दछ ।

उसलाई क्षमा एवं उत्तम प्रतिदानको शुभ-सूचना सुनाइदिनुस् ।

(१२) नि:सन्देह हामीले मुर्दाहरुलाई जीवित गर्नेछौं,[1] तथा हामी लेख्दैजान्छौं ती कर्म पनि जसलाई मानिसले अगाडी पठाउँछन्[2] तथा उनका त्यो कर्म

إِنَّا نَحْنُ نُحْيِ الْمَوْتَىٰ وَنَكْتُبُ مَا قَدَّمُوا وَآثَارَهُمْ ۚ وَكُلَّ شَيْءٍ أَحْصَيْنَاهُ

[1]अर्थात् केयामतका दिन । यहाँ मूर्दाहरुलाई जीवित गर्नुको चर्चाबाट यो संकेत गर्न उद्देश्य हो कि अल्लाह तआला काफ़िरहरुमध्ये जसको हृदय चाहन्छ, जीवित गरिदिन्छ जो कुफ्र तथा कुमार्ग हुनुका कारण मृत भइसकेका हुन्छन्, अनि उनी संमार्ग तथा ईमानलाई अप्नाउँदछन् ।

[2] مَا قَدَّمُوا बाट त्यो कर्म अभिप्राय हो जो मनुष्य आफ्ना जीवनमा गर्दछ, तथा آثَارَهُم बाट त्यो कर्म जसका व्यवहारिक नमूनाहरु (राम्रा एवं नराम्रा) त्यो जगत्मा छाडेर जान्छ तथा त्यसका निधनका पश्चात त्यसका अनुसरणमा मानिस ती कर्म गर्दछन् । जस्तो हदीसमा छ, "जसले इस्लाममा कुनै पुनीत तरीका जारी गरे त्यसका लागि त्यसको प्रतिकार पनि छ तथा त्यसको पनि जो तत्पश्चात त्यसमाथि कार्यरत हुनेछ यसबिना कि तिनीमध्ये कसैका भारमा कमी होस्, तथा जसले खराब रीति निकालेर त्यसमाथि त्यसका आफ्ना पापका पनि बोझ हुनेछ र त्यसका पनि जो तत्पश्चात कर्म गर्नेछ बिना यसको कि उनमा कुनै भारको कमी होस् । (सहीह मुस्लिम, किताबुज़्ज़कात) यसैप्रकार यो हदीस छ कि जब मानिस मर्दछ त त्यसका कर्मको क्रम समाप्त भएर जान्छ तीन वस्तुहरुका अतिरिक्त । एक ज्ञान, जसबाट मानिस लाभ प्राप्त गर्दछन्, दोस्रो असल सन्तान, जो मृतका लागि प्रार्थना गर्दछन्, तेस्रा सञ्चालित दान (सद्क: जारियह) जसबाट त्यसका मृत पश्चात पनि लाभ प्राप्त गर्दछन् । (सहीह मुस्लिम, किताबुल वसीयत, बाबु मा यलहकुल इन्सान मिनस स्वाबेबाद बफ़ातिहि) दोस्रा अभिप्राय آثَارَهُم को पदचिन्ह हो अर्थात मानिस राम्रा एवं नराम्राका लागि दुई यात्रा गर्दछ तथा एक स्थानबाट अर्को स्थानमा जान्छ त पाइलाका यी चिन्ह पनि लेखिन्छन् । जस्तो नबी सल्लल्लाहु अलैहि वसल्लमका युगमा मस्जिदे नबवीका पासमा केही खाली ठाउँ थियो त बनू सलमाले त्यहाँ स्थानान्तरण गर्न चाहे । जब नबी सल्लल्लाहु अलैहि वसल्लमका ज्ञानमा यो कुरा आयो त उहाँले मस्जिदका समीप उनलाई स्थानान्तरित हुनुबाट रोकिदिनुभयो तथा भन्नुभयो "دِيَارَكُمْ تُكْتَبْ آثَارُكُمْ" (दुई पटक भन्नुभयो) अर्थात तिम्रा घर यद्यपि टाढा छन् किन्तु त्यहीं रह, जति पाइला हिंडेर आउँछौ ती लेखिन्छन् । (सहीह मुस्लिम, किताबुल मसाजिद, बाबु कसरतिल खुता इलल मसाजिद) इमाम इब्ने कसीर भन्नुहुन्छ यी दुबै अर्थ आफ्नो ठाउँमा सही छन्, यिनमा प्रतिकूलता छैन, बरु यसका दोस्रा अर्थमा कडी चेतावनी छ यसकारण कि जब पद-चिन्हसम्म लेखिन्छन् त मानिस जो राम्रो-नराम्रो नमूना छोडेर जान्छ जसको मानिस अनुसरण गर्छन् त ती समुचित

فِيْٓ اِمَامٍ مُّبِيْنٍ ⑫

पनि जसलाई पछाडी छाडेर जान्छन्, तथा प्रत्येक कुरालाई हामीले एउटा खुल्ला किताबमा संकलन गरेका छौं ।[1]

وَاضْرِبْ لَهُمْ مَّثَلًا اَصْحٰبَ الْقَرْيَةِ ۘ اِذْ جَآءَهَا الْمُرْسَلُوْنَ ⑬

(१३) तथा तपाईं उनका समक्ष एक उदाहरण (अर्थात एक) वस्तीवालाहरुको कथा (त्यस समयको) वर्णन गर्नुस्, जबकि त्यस वस्तीमा कुनै रसूल आए ।[2]

اِذْ اَرْسَلْنَآ اِلَيْهِمُ اثْنَيْنِ فَكَذَّبُوْهُمَا فَعَزَّزْنَا بِثَالِثٍ فَقَالُوْٓا اِنَّآ اِلَيْكُمْ مُّرْسَلُوْنَ ⑭

(१४) जबकि हामीले उनका पासमा दुईटालाई पठायौं, त तिनीहरुले (प्रथम) ती दुबैलाई भुठ्लाए अनि हामीले तेस्रोबाट समर्थन दियौं त तीनैले भने कि हामी तिम्रा पासमा पठाइएका हौं ।[3]

قَالُوْا مَآ اَنْتُمْ اِلَّا بَشَرٌ مِّثْلُنَا ۙ وَمَآ اَنْزَلَ الرَّحْمٰنُ مِنْ شَيْءٍ ۙ اِنْ اَنْتُمْ اِلَّا تَكْذِبُوْنَ ⑮

(१५) उनीहरुले भने कि तिमी त हामीजस्तै साधारण मुनष्य हौं तथा दयालुले कुनै वस्तु अवतरित गरेन, तिमी त केवल भुठा कुरा गर्दछौ ।

قَالُوْا رَبُّنَا يَعْلَمُ اِنَّآ اِلَيْكُمْ لَمُرْسَلُوْنَ ⑯

(१६) ती रसूलहरुले भने कि हाम्रो प्रभु जान्दछ वस्तुतः हामी तिमीतिर पठाइएका हौं ।

---

रुपमा लेखिनेछन् ।

[1]यसबाट अभिप्राय लौहे महफूज (सुरक्षित पुस्तक) हो तथा केही ज्ञाताहरुले यसबाट कर्मपत्र तात्पर्य लिएका छन् ।

[2]ताकि मक्कावासी बुभिहालून् कि तपाईं कुनै अद्भुत ईशदूत (नबी) हुनुहुन्न बरु यी ईशदूतहरुको क्रम आदिदेखि चलिआइराखेको छ ।

[3]यी तीन रसूल को थिए भाष्यकारहरुले उनका विभिन्न नाम वर्णन गरेका छन् किन्तु नाम प्रमाणित माध्यमबाट सिद्ध छैन । केही व्याख्याकारहरुको विचार छ कि यी ईशदूत ईसाबाट पठाइएका थिए जो उनले अल्लाहका आदेशबाट एक वस्तीमा धर्मका प्रचार एवं प्रसारका लागि पठाएका थिए । वस्तीको नाम अंताकिया थियो ।

وَمَا عَلَيْنَآ إِلَّا ٱلْبَلَٰغُ ٱلْمُبِينُ ﴿١٧﴾

(१७) तथा हाम्रो कर्तव्य त केवल स्पष्टरुपले पुऱ्याइदिनु हो ।

قَالُوٓا۟ إِنَّا تَطَيَّرْنَا بِكُمْ ۖ لَئِن لَّمْ تَنتَهُوا۟ لَنَرْجُمَنَّكُمْ وَلَيَمَسَّنَّكُم مِّنَّا عَذَابٌ أَلِيمٌ ﴿١٨﴾

(१८) उनीहरुले भने कि हामी त तिमीलाई अशुभ ठान्दछौं ।[1] यदि तिमी रोकिएनौं भने हामीले तिमीलाई ढुङ्गाबाट मारेर तिम्रो कार्य समाप्त गरिदिनेछौं तथा तिमीलाई हाम्रो तर्फबाट कडा कष्ट पुग्नेछ ।

قَالُوا۟ طَٰٓئِرُكُم مَّعَكُمْ ۚ أَئِن ذُكِّرْتُم ۚ بَلْ أَنتُمْ قَوْمٌ مُّسْرِفُونَ ﴿١٩﴾

(१९) ती (रसूलहरु) ले भने कि तिम्रो अशुभ त तिम्रै साथमा लागेको छ,[2] के त्यसलाई (अशुभ ठान्दछौ) कि तिमीलाई शिक्षा दिइयोस्, बरु तिमी त सीमा उल्लंघन गर्नेहरु हौ ।

وَجَآءَ مِنْ أَقْصَا ٱلْمَدِينَةِ رَجُلٌ يَسْعَىٰ قَالَ يَٰقَوْمِ ٱتَّبِعُوا۟ ٱلْمُرْسَلِينَ ﴿٢٠﴾

(२०) तथा एउटा व्यक्ति त्यस नगरको अन्तिम किनारबाट दगुर्दै आयो, भन्नलाग्यो कि हे मेरा समुदायका मानिसहरु यी रसूलहरु (सन्देष्टाहरु) का मार्गमा हिंड ।[3]

ٱتَّبِعُوا۟ مَن لَّا يَسْـَٔلُكُمْ أَجْرًا وَهُم مُّهْتَدُونَ ﴿٢١﴾

(२१) त्यसता मानिसहरुको मार्गमा हिंड जो तिमीसित कुनै पारिश्रमिक माँग्दैनन् तथा उनी सत्य-मार्गमा छन् ।



[1]संभव छ कि केही मानिसहरुले ईमान स्वीकार गरेका होऊन्, जसलाई उनीहरुले نعوذ بالله रसूलहरुको अशुभ भने, अथवा वर्षाको क्रम स्थगित भएको अवस्थामा उनीहरुले सम्झेका होऊन् कि यी रसूलहरुको अशुभ हो, نعوذ بالله من ذلك जस्तो आज पनि दुरात्मा तथा धर्म एवं धर्मविधानबाट बञ्चित मानिस ईमान्दार तथा सदाचारी मानिसहरुलाई नै अशुभ ठान्दछन् ।

[2]अर्थात् त्यो त तिम्रा कुकर्महरुको परिणाम हो जो तिम्रा साथमा नै छ न कि हाम्रा साथमा ।

[3]यो व्यक्ति मुसलमान थियो, जब उसलाई थाहा भयो कि जाति पैगम्बरहरुका निमन्त्रणलाई अप्नाइराखेका छैनन त उसले आएर रसूलहरुको पक्ष लियो तथा उनका अनुसरणका लागि प्रोत्साहित गऱ्यो ।

وَمَا لِيَ لَآ أَعْبُدُ ٱلَّذِى فَطَرَنِى وَإِلَيْهِ تُرْجَعُونَ ﴿٢٢﴾

(२२) तथा मलाई के भएको छ कि म त्यसको इबादत नगरुँ, जसले मलाई पैदा गऱ्यो तथा तिमी सबै उसैतिर फर्काइनेछौ ।[1]

ءَأَتَّخِذُ مِن دُونِهِۦٓ ءَالِهَةً إِن يُرِدْنِ ٱلرَّحْمَٰنُ بِضُرٍّ لَّا تُغْنِ عَنِّى شَفَٰعَتُهُمْ شَيْـًٔا وَلَا يُنقِذُونِ ﴿٢٣﴾

(२३) के म त्यसलाई छाडेर यस्तालाई उपास्य बनाउँ कि यदि (अल्लाह) दयालु मलाई कुनै हानि पुऱ्याउन चाहन्छ, त उनको सिफारिश मलाई केही पनि लाभ पुऱ्याउन नसकोस् तथा न उनीहरुले मलाई बचाउनेछन् ।[2]

إِنِّىٓ إِذًا لَّفِى ضَلَٰلٍ مُّبِينٍ ﴿٢٤﴾

(२४) अनि त म निश्चय खुल्ला विचलनमा छु ।[3]

إِنِّىٓ ءَامَنتُ بِرَبِّكُمْ فَٱسْمَعُونِ ﴿٢٥﴾

(२५) मेरो कुरा सुन ! म त (स्वच्छ हृदयले) तिमी सबैका प्रभुमा ईमान स्थापित गरिसके ।[4]

---

[1]आफ्ना धर्म तौहीद (एकेश्वरवाद) लाई स्पष्ट गरे जसको उद्देश्य आफ्नो जातिको हित तथा उनको सही मार्गदर्शन थियो । यो पनि सम्भव छ कि त्यसको जातिले उसित भनेको होस् कि के तिमी पनि त्यस पूज्यको उपासना गर्दछौ जसतिर यो रसूल हामीलाई बोलाइराखेका छन्, तथा हाम्रा उपास्यहरुलाई तिमी पनि छाडिसकेका छौ ? जसको उत्तरमा उसले यो भन्यो । भाष्यकारहरुले त्यसको नाम हबीब नज्जार भनेका छन् ।

[2]यो ती झूठा उपास्यहरुको विवशताको स्पष्टीकरण हो, जसको पूजा त्यसको जातिले गर्दथ्यो तथा शिर्कको यस पथभ्रष्तताबाट निस्कनका लागि रसूल उनीतिर पठाइएका थिए । "न बचाउन सके" को अभिप्राय हो कि यदि अल्लाह मलाई हानिग्रस्त गर्न चाहन्छ भने तिनीहरु बचाउन सक्दैनन् ।

[3]अर्थात् म पनि तिम्रो समान अल्लाहलाई छाडेर यस्ता लाचार एवं विवश उपास्यहरुको बन्दना आरम्भ गरिदिन्छु भने म पनि पथभ्रष्टतामा गई खस्नेछु । अथवा ضلال (पथभ्रष्टता) यहाँ خسران (क्षति) का अर्थमा छ, अर्थात यो त खुल्ला हानिको सौदा हो ।

[4]त्यसबाट तौहीद (एकेश्वरवाद) एवं तौहीदका इकरार (स्वीकार) का कारण जातिले त्यसको हत्या गर्न चाहयो, त उसले पैगम्बरहरुलाई गर्दै भन्यो, अभिप्राय आफ्ना ईमानमाथि यी सन्देशवाहकहरुलाई साक्षी बनाउनु थियो, अथवा आफ्नो जातिलाई सम्बोधित गरेर भन्यो, जसबाट तात्पर्य सत्य धर्ममा आफ्नो दृढता एवं स्थिरता देखाउनु थियो कि तिमी जे चाहन्छौ

قِيْلَ ادْخُلِ الْجَنَّةَ ۖ قَالَ يٰلَيْتَ قَوْمِيْ يَعْلَمُوْنَ ﴿٢٦﴾

(२६) (उससित) भनियो कि स्वर्गमा गइहाल, भन्यो, काश कि मेरो जातिलाई पनि ज्ञान भइदिएको भए ।

بِمَا غَفَرَ لِيْ رَبِّيْ وَجَعَلَنِيْ مِنَ الْمُكْرَمِيْنَ ﴿٢٧﴾

(२७) जबकि मलाई मेरो प्रभुले क्षमा गरिदियो तथा मलाई सम्मानित व्यक्तिहरु मध्येको बनाइदियो ।[1]

وَمَآ اَنْزَلْنَا عَلٰى قَوْمِهٖ مِنْۢ بَعْدِهٖ مِنْ جُنْدٍ مِّنَ السَّمَآءِ وَمَا كُنَّا مُنْزِلِيْنَ ﴿٢٨﴾

(२८) तथा त्यसका पश्चात हामीले त्यसको जातिमाथि आकाशबाट कुनै सेना अवतरित गरेनौं ।[2] तथा न यसप्रकार हामी अवतरित गर्दछौं ।[3]

اِنْ كَانَتْ اِلَّا صَيْحَةً وَّاحِدَةً فَاِذَا هُمْ خٰمِدُوْنَ ﴿٢٩﴾

(२९) त्यो त केवल एउटा ठूलो चित्कार थियो कि सहसा ती सबका-सब निभेर गए ।[4]

गर किन्तु सुनिहाल कि मेरो ईमान (विश्वास) त्यसै पालनहारमाथि छ जो तिम्रो पनि पोषक हो । भनिन्छ कि उसलाई उनीहरुले मारिहाले तथा कसैले त्यसलाई रोकेन رحمه الله تعالى (त्यसमाथि अल्लाह तआलाको दया होस्) ।

[1]अर्थात् जुन ईमान एवं तौहीदका कारण मलाई प्रभुले क्षमा गरिदियो, काश मेरो जाति यो कुरा जानोस् ताकि उनीहरु पनि ईमान तथा तौहीद (अद्वैतवाद) लाई अप्नाएर अल्लाहको क्षमा एवं त्यसका प्रदानहरुको पात्र होऊन् । यसप्रकार त्यो मर्नुका पश्चात पनि आफ्नो जातिको हितैषी रहे । एउटा सच्चा मोमिनलाई यस्तै हुनुपर्छ कि त्यो प्रत्येक क्षण मानिसहरुको भलो गरोस् अपकार नगरोस्, उनलाई सही निर्देश देओस् पथभ्रष्ट नगरोस्, मानिस उसलाई जे-चाहन्छन् भनून् तथा जस्तो व्यवहार चाहन्छन् गरून् यहाँसम्मकि उसलाई मारिहालून् ।

[2]अर्थात् हबीब नज्जारको हत्या हुनुको पश्चात उनका विनाशका लागि आकाशबाट फरिश्ताहरुको कुनै सेना उतारेन । यो यस जातिको हीनतातिर संकेत छ ।

[3]अर्थात् जुन समुदायको विनाश कुनै अर्को रीतिले लेखिएको हुन्छ त त्यहाँ हामी फरिश्ताहरु उतार्दैनौं पनि ।

[4]भन्दछन् कि जिब्रील (फरिश्ता) ले एउटा चित्कार गरे, जसबाट सबका प्राणहरुले शरीर त्यागदिए तथा निभिएका आगोका समान भइहाले मानौं जीवन प्रज्जवलित अग्नि हो तथा मृत त्यसलाई निभाएर खरानी भइदिनु ।

يٰحَسْرَةً عَلَى الْعِبَادِ ۚ مَا يَأْتِيهِم مِّن رَّسُولٍ إِلَّا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ﴿٣٠﴾

(३०) (यस्ता) बन्दाहरु (दासहरु) माथि अफसोच[१] ! जो रसूल पनि उनका पासमा आएनन्, उनीहरु उसका परिहास नै गरिरहे ।

أَلَمْ يَرَوْا كَمْ أَهْلَكْنَا قَبْلَهُم مِّنَ الْقُرُونِ أَنَّهُمْ إِلَيْهِمْ لَا يَرْجِعُونَ ﴿٣١﴾

(३१) के उनीहरुले देखेनन् कि उनीहरुभन्दा पूर्व धेरैजसो समुदायहरुलाई ध्वस्त गरिदियौं कि उनीहरु उनीतिर[२] फर्कने छैन ।

وَإِن كُلٌّ لَّمَّا جَمِيعٌ لَّدَيْنَا مُحْضَرُونَ ﴿٣٢﴾

(३२) तथा छैन कुनै समूह परन्तु यो कि त्यो एकत्रित भई हाम्रा समक्ष प्रस्तुत गरिनेछ ।[३]

وَآيَةٌ لَّهُمُ الْأَرْضُ الْمَيْتَةُ أَحْيَيْنَاهَا وَأَخْرَجْنَا مِنْهَا حَبًّا فَمِنْهُ يَأْكُلُونَ ﴿٣٣﴾

(३३) तथा उनका लागि एउटा निशानी[४] (सुकेको) मृत धर्ती छ जसलाई हामीले जीवित गरिदिएका थियौं तथा त्यसबाट अन्न निकालदियौं जसबाट उनीहरु खान्छन् ।

وَجَعَلْنَا فِيهَا جَنَّاتٍ مِّن نَّخِيلٍ

(३४) तथा हामीले त्यसमा खजूरहरुका तथा अंगूरहरुका बगैंचा उत्पन्न गरिदियौं,[५] तथा

[१]खेद एवं पश्चातापको प्रदर्शन स्वयं आफूमाथि, क़ेयामत (प्रलय) का दिन यातना देखे पश्चात गर्नेछन् कि काश उनीहरुले अल्लाहका बारेमा आलस्य नगरेको भए, अथवा अल्लाह दासहरुमाथि खेद व्यक्त गरिराखेको छ कि जहिलेपनि उनका पासमा कुनै रसूल आयो त उनले त्यसका साथ उपहास नै गरे ।

[२]यसमा मक्काका निवासीहरुका लागि चेतावनी छ कि रिसालतलाई झुठ्लाउनुका कारण पछिल्ला जातिहरुको विनाश भयो, यिनी पनि नाश हुनसक्छन् ।

[३]यसमा إِنْ "होइन" को अर्थमा छ तथा لَمَّا अर्थमा छ إِلَّا का, अभिप्राय यो हो कि सबै मानिस विगत पनि तथा आगामी पनि अल्लाहका सदनमा उपस्थित हुनेछन् जहाँ उनको लेखाजोखा हुनेछ ।

[४]अर्थात् अल्लाहका अस्तित्व, त्यसका पूर्ण सामर्थ्य तथा मूर्दाहरुलाई पुनः जीवित गर्नमा चिन्ह ।

[५]अर्थात् निर्जीव धर्तीलाई जीवित गरेर हामीले खानका लागि केवल अन्न नै उगाएको होइन बरु स्वादका लागि विभिन्न प्रकारका फल पनि प्रचुर मात्रामा उत्पन्न गर्दछौं । यहाँ विभिन्न प्रकारका फल पनि प्रचुर मात्रामा उत्पन्न गर्दछौं । यहाँ मात्र दुई फलहरुको चर्चा यसकारण गरियो कि यिनी निकै लाभदायक छन् तथा अरबहरुलाई रुचिकर पनि, तथा यिनको उपज पनि अरबमा

وَّ اَعۡنَابٍ وَّ فَجَّرۡنَا فِیۡهَا مِنَ الۡعُیُوۡنِ ﴿۳۴﴾

जसमा हामीले जलस्रोत पनि प्रवाहित गरिदिएका छौं ।

لِیَاۡكُلُوۡا مِنۡ ثَمَرِهٖ ۙ وَ مَا عَمِلَتۡهُ اَیۡدِیۡهِمۡ ؕ اَفَلَا یَشۡكُرُوۡنَ ﴿۳۵﴾

(३५) ताकि (मानिसहरु) यसका फल खाऊन्,[1] तथा उनका हातहरुले त्यसलाई बनाएनन् ।[2] अनि किन कृतज्ञता व्यक्त गर्दैनन् ।

سُبۡحٰنَ الَّذِیۡ خَلَقَ الۡاَزۡوَاجَ كُلَّهَا مِمَّا تُنۡۢبِتُ الۡاَرۡضُ وَ مِنۡ اَنۡفُسِهِمۡ وَ مِمَّا لَا یَعۡلَمُوۡنَ ﴿۳۶﴾

(३६) त्यो पवित्र शक्ति हो जसले प्रत्येक वस्तुका जोडाहरु पैदा गऱ्यो, चाहे तिनी धर्तीबाट उमारिएका वस्तुहरु होऊन्, चाहे स्वयं उनको आफ्नो जाति (अस्तित्व) होस्, चाहे ती (वस्तुहरु) होऊन् जसलाई यिनीहरु जान्दैनन् पनि ।[3]

---

अधिक छ । अनि अन्यको चर्चा पहिला गऱ्यौं किनकि त्यसको उपज पनि अधिक छ तथा खाद्यान्न हुनुका कारण त्यसको महत्व पनि निर्विवाद । जबसम्म मानिस रोटी, चामल आदि खाद्यान्नबाट आफ्नो पेट भर्दैन मात्र फलबाट यसको खानुको आवश्यकता पूरा हुँदैन ।

[1]अर्थात् केही स्थानमा स्रोत पनि प्रवाहित गर्दछौं जसका जलबाट पैदा हुने फल मानिसहरु खाऊन् ।

[2]इमाम इब्ने ज़रीरको विचारमा यहाँ ما नकारात्मक छ, अर्थात् अन्य तथा फलहरुको पैदावार अल्लाह तआलाको विशेष दया हो जो त्यो आफ्ना भक्तहरुमाथि गर्दछ । यसमा उनका प्रयास एवं परिश्रम, तथा अधिकारको हस्तक्षेप छैन । तैपनि यी उपकारहरुमा उसको कृतज्ञता किन देखाउँदैनन् ? केही ज्ञाताहरुका निकट ما त्यो हो, जो الذى का अर्थमा छ, अर्थात् ताकि त्यसको फल खाऊन् र जसलाई उनका हातहरुले बनाए । हातहरुको कर्म हो धर्तीलाई समतल गरी ब्यू छर्नु । यस्ता नै फलहरु खानुका विभिन्न विधि छन्, उनलाई निचारेर उनको रस पिउनु, अनेक फलहरुका योगबाट चाट बनाउनु इत्यादि ।

[3]अर्थात् मानिसहरुका समान धर्तीको प्रत्येक उपजमा हामीले भाले-पोथी दुबै बनाएका छौं । यिनका अतिरिक्त आकाशहरुमा तथा धर्तीका गहिराईहरुमा पनि जुन वस्तुहरु तिमीबाट गुप्त छन्, जसका ज्ञान तिमीलाई छैन, उनीहरु पनि जोडा (भाले-पोथी) को यो व्यवस्था हामीले राखेका छौं । अत: सबै उत्पत्ति जोडी-जोडी छ, वनस्पतिमा पनि भाले-पोथीको व्यवस्था छ यहाँसम्मकि अलौकिक जीवन परलोकका जीवनका लागि जोडा तथा यो परलोकका जीवनका लागि

وَءَايَةٌ لَّهُمُ ٱلَّيْلُ نَسْلَخُ مِنْهُ ٱلنَّهَارَ فَإِذَا هُم مُّظْلِمُونَ ﴿٣٧﴾

(३७) तथा उनका लागि एउटा निशानी राति छ, जसबाट हामी दिनलाई तानिदिन्छौं त सहसा उनी अन्धकारमा रहन जान्छन् ।[1]

وَٱلشَّمْسُ تَجْرِى لِمُسْتَقَرٍّ لَّهَا ذَٰلِكَ تَقْدِيرُ ٱلْعَزِيزِ ٱلْعَلِيمِ ﴿٣٨﴾

(३८) तथा सूर्यका लागि जो निर्धारित मार्ग छ, त्यो त्यसैमा हिंडिरहन्छ ।[2] यो हो निर्धारित गरिएको प्रभावशाली सर्वज्ञ (अल्लाह तआला) का (निर्णय) ।

وَٱلْقَمَرَ قَدَّرْنَٰهُ مَنَازِلَ حَتَّىٰ

(३९) तथा चन्द्रमाको हामीले गन्तव्यहरु निर्धारित गरेका छौं[3] यहाँसम्मकि त्यो घूमफिर गरी

एउटा बौद्धिक युक्ति पनि छ । मात्र एक अल्लाह हो जो उत्पत्तिको यस विशेषता तथा अन्य सबै कमीहरुबाट पवित्र छ, त्यो वित्र (विषम) छ जोडा होइन ।

[1]अर्थात् अल्लाहका सामर्थ्यको एउटा तर्क यो पनि हो कि त्यसले दिनलाई रात्रिबाट अलग गर्दछ जसबाट तुरुन्त अँध्यारो हुनजान्छ । سلخ (सलख) को अर्थ हुन्छ जनावरको छाला त्यसका शरीरबाट अलग गर्नु, जसबाट त्यसको मासु प्रकट हुनजान्छ । यसैप्रकार अल्लाह दिनलाई रातबाट अलग गरिदिन्छ । أظلم अज़्लम) को अर्थ हो अन्धकारमा प्रवेश गर्नु, जस्तै أصبح तथा أظهر (अस्बह एवं अज़्हर) तथा أمسى (अम्सा) का अर्थ हुन् प्रातः सन्ध्या तथा दिउँसोका समयमा प्रवेश गर्नु ।

[2]अर्थात् आफ्नो धुरी (आकाश) मा हिंडिरहन्छ जो अल्लाहले त्यसका लागि निर्धारित गरेको छ, यसैबाट आफ्ना यात्रा आरम्भ गर्दछ तथा त्यहीं समाप्त गर्दछ, यसैबाट यताउता हुँदैन कि कुनै ग्रहसित जुद्ध होस् दोस्रो अर्थ हो आफ्नो बस्ने ठाउँसम्म, र त्यसको यो स्थान अर्शका मुनि छ जो सूरः अल-हज़्ज आयत संख्या १८ को व्याख्यामा गुज्रिसकेको छ, कि सूर्य प्रत्येक दिन अस्ताउनुका पश्चात अर्शका मुनि सजदा गर्दछ र फेरि यहाँबाट उदय हुनुको अनुमति माँग्दछ (सहीह बुख़ारी, तफ़सीर सूरः यासीन) दुबै भावार्थका आधारमा لمستقر मा अक्षर 'लाम' कारण बताउनका लागि छ । أي-لأجل مستقرلها केही ज्ञाताहरुको भनाई छ कि लाम لام (इला 'सम्म') का अर्थमा छ, अनि مُستقر प्रलय दिवस हुनेछ । अर्थात सूर्यको यो गति प्रलयका दिनसम्म छ, क़्यामत (प्रलय) का दिन त्यसको गति समाप्त भइहाल्नेछ । यी ती नै भावार्थ आ-आफ्ना स्थानमा सही छन् ।

[3]चन्द्रमाका २८ गन्तव्य छन्, नित्य-दिन एउटा गन्तव्य पार गर्दछ अनि दुई रात लुप्त रही तेस्रो रात उदय हुन्छ ।

عَادَ كَالْعُرْجُونِ الْقَدِيمِ ﴿٣٩﴾

पुरानो टेहनी (खजूरको पुरानो हाँगा) का समान हुन जान्छ ।[1]

لَا الشَّمْسُ يَنْبَغِي لَهَا أَنْ تُدْرِكَ الْقَمَرَ وَلَا اللَّيْلُ سَابِقُ النَّهَارِ ۚ وَكُلٌّ فِي فَلَكٍ يَسْبَحُونَ ﴿٤٠﴾

(४०) न सूर्यका वशमा छ कि चन्द्रमालाई समातोस्[2] तथा न रात्रि दिनभन्दा अगाडी जानेवाली छ,[3] तथा सबका सब आकाशमा तैरदै घुमिरहन्छन् ।[4]

وَآيَةٌ لَهُمْ أَنَّا حَمَلْنَا ذُرِّيَّتَهُمْ فِي الْفُلْكِ الْمَشْحُونِ ﴿٤١﴾

(४१) तथा उनका लागि एउटा निशानी (यो पनि) छ कि हामीले उनको सन्तानलाई भरिएको डुङ्गामा सवार गर्‍यौं ।[5]

وَخَلَقْنَا لَهُمْ مِنْ مِثْلِهِ مَا يَرْكَبُونَ ﴿٤٢﴾

(४२) तथा यिनका लागि त्यसै जस्तो अन्य वस्तुहरु पैदा गर्‍यौं जसमा यिनीहरु सवार हुन्छन् ।[6]

---

[1] अर्थात् जब अन्तिम गन्तव्यमा पुग्छ त अति पातलो तथा सानो हुनजान्छ जस्तै खज़ूरको पुरानो टहनी (हाँगा) हुन्छ जो सुखेर बाङ्गो हुन्छ । चन्द्रमाका यसै चक्रबाट धर्तीका निवासी आफ्ना दिन महिना तथा वर्षहरुको हिसाब तथा आफ्नो उपासनाको समय निश्चित गर्दछन् ।

[2] अर्थात् सूर्यका लागि यो संभव छैन कि त्यो चन्द्रमालाई गई समातोस् जसबाट त्यसको प्रकाश समाप्त हुन जाओस् बरु दुबैको अलग-अलग मार्ग तथा पृथक-पृथक सीमा छ । सूर्य दिनमा नै तथा चन्द्रमा रात्रिमा नै उदय हुन्छ यसका विपरीत कहिल्यै भएन, जो सृष्टिका एक हुनुको एउटा निकै ठूलो युक्ति हो ।

[3] बरु यी पनि एक व्यवस्थाक्रमले बाँधिएका छन् तथा एक-अर्काका पश्चात आउँछन् ।

[4] كُلٌّ (प्रत्येक) बाट तात्पर्य सूर्य, चन्द्र अथवा त्यसका साथ अन्य ग्रह छन्, सबै आ-आफ्ना मार्गमा घुम्छन्, उनको परस्पर टकराव हुँदैन ।

[5] यसमा अल्लाह तआला आफ्ना त्यस अनुग्रहको चर्चा गरिराखेको छ कि त्यसले तिम्रा निम्ति समुद्रमा डुङ्गा हिंड्न सरल गरिदियो यहाँसम्मकि तिमी आफूसँग भरिएका डुङ्गाहरुमा आफ्ना बच्चाहरुलाई लैजान्छौ दोस्रो अर्थ यो गरिएको छ कि ذُرِّيَّة बाट तात्पर्य ذُرِّيَّة का पितागण हुन् तथा डुङ्गासित अभिप्राय नूहको नौका हो, अर्थात् नूहको नौकामा ती दुबैलाई सवार गर्‍यो जसबाट पछि मानव वंश अगाडी बढ्यो । मानौं मानव जातिका पिता यसैमा सवार थिए ।

[6] यसबाट अभिप्राय यस्ता सवारीहरु हुन् जो डुङ्गाको जस्तो मानव तथा व्यवसायिक सामानलाई एक ठाउँबाट अर्को ठाउँ लैजान्छन्, यसमा क़ियामत (प्रलय) सम्म पैदा हुने वस्तुहरु आइहाले, जस्तै वायुयान, जलयान, रेल, बस, कारहरु तथा अन्य परिवाहनका साधन ।

(४३) तथा यदि हामीले चाहेको भए त उनीहरुलाई डुबाइदिन्थ्यौं त्यस पश्चात न कोही उनको सहायता गर्ने हुन्थ्यो तथा न बचाइन्थे ।

وَاِنْ نَّشَاْ نُغْرِقْهُمْ فَلَا صَرِيْخَ لَهُمْ وَ لَا هُمْ يُنْقَذُوْنَ ۝

(४४) परन्तु हामी आफ्नो तर्फबाट दया गर्दछौं तथा एउटा अवधि सम्मका लागि उनीहरुलाई लाभ दिइराखेका छन् ।

اِلَّا رَحْمَةً مِّنَّا وَمَتَاعًا اِلٰى حِيْنٍ ۝

(४५) तथा उनीसित जतिखेर भनिन्छ कि अघिल्ला-पछिल्ला (पापहरु) बाट बच ताकि तिमीमाथि दया गरियोस् ।

وَاِذَا قِيْلَ لَهُمُ اتَّقُوْا مَا بَيْنَ اَيْدِيْكُمْ وَمَا خَلْفَكُمْ لَعَلَّكُمْ تُرْحَمُوْنَ ۝

(४६) तथा उनका पासमा उनका प्रभुका आयतहरुमध्ये जो आयत पनि आउँछ, उनीहरु त्यसबाट पन्छिन्छन् नै ।[१]

وَمَا تَاْتِيْهِمْ مِّنْ اٰيَةٍ مِّنْ اٰيٰتِ رَبِّهِمْ اِلَّا كَانُوْا عَنْهَا مُعْرِضِيْنَ ۝

(४७) तथा उनीसित जब भनिन्छ कि अल्लाह (तआला) बाट दिइएका मध्येबाट केही खर्च गर[२] त यी काफिर ईमान भएकाहरुलाई उत्तर दिन्छन् कि हामी उनीहरुलाई किन खुवाऔं जसलाई यदि अल्लाह तआला चाहेको भए स्वयं खुवाइदिन्थे ?[३] तिमी त छौ नै खुल्ला पथभ्रष्टतामा ।[४]

وَاِذَا قِيْلَ لَهُمْ اَنْفِقُوْا مِمَّا رَزَقَكُمُ اللّٰهُ ۙ قَالَ الَّذِيْنَ كَفَرُوْا لِلَّذِيْنَ اٰمَنُوْٓا اَنُطْعِمُ مَنْ لَّوْ يَشَآءُ اللّٰهُ اَطْعَمَهٗٓ ۖ اِنْ اَنْتُمْ اِلَّا فِيْ ضَلٰلٍ مُّبِيْنٍ ۝

[१]अर्थात् तौहीद (अद्वैत) तथा रसूलका सत्यताको जो पनि निशानी उनका सामु आउँछ, त्यसमा ध्यान नै दिंदैनन् कि जसबाट उनलाई लाभ होस् । प्रत्येक निशानीमा मुख फर्काउनु उनको आचरण हो ।

[२]अर्थात् निर्धन, दरिद्र एवं आवश्यकता भएकाहरुको ।

[३]अर्थात् अल्लाहले चाहेको भए त यिनीहरुलाई निर्धन नै बनाउने थिएन, हामीले यिनलाई देखेर अल्लाहको इच्छाका विपरीत किन गरौं ।

[४]अर्थात् यो भनेर कि दरिद्रहरुको सहायता गर, खुल्ला त्रुटिको प्रदर्शन गरिराखेका छौ । यो कुरा त सही थियो कि निर्धनता एवं दरिद्रता अल्लाहको चाहत नै थियो, किन्तु यसलाई

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٤٨﴾

(४८) तथा उनीहरु भन्दछन् कि यो वाचा (केयामतको धम्की) कहिले आउनेछ, साँचो हौ भने भन ।

مَا يَنظُرُونَ إِلَّا صَيْحَةً وَاحِدَةً تَأْخُذُهُمْ وَهُمْ يَخِصِّمُونَ ﴿٤٩﴾

(४९) उनीहरुलाई केवल एउटा शक्तिशाली चित्कारको प्रतिक्षा छ जो उनीहरुलाई आइ समात्नेछ तथा यिनी आपसी लडाई-झगडामा नै हुनेछन् ।[1]

فَلَا يَسْتَطِيعُونَ تَوْصِيَةً وَلَا إِلَىٰ أَهْلِهِمْ يَرْجِعُونَ ﴿٥٠﴾

(५०) त्यसबखत यिनीहरु न त वसीयत गर्न सक्नेछन् तथा न आफ्ना परिवारतिर फर्कन सक्नेछन् ।

وَنُفِخَ فِي الصُّورِ فَإِذَا هُم مِّنَ الْأَجْدَاثِ إِلَىٰ رَبِّهِمْ يَنسِلُونَ ﴿٥١﴾

(५१) तथा नरसिंघा फुकिनासाथै[2] सबै आफ्नो चिहानहरुबाट आफ्ना प्रभुतिर (तीब्र गति) ले हिंड्न थाल्नेछन् ।

قَالُوا يَا وَيْلَنَا مَن بَعَثَنَا مِن مَّرْقَدِنَا ۜ

(५२) भन्नेछन् कि हाय, हामीलाई हाम्रा शयनकक्षहरुबाट कसले उठाइदियो?[3] यही हो

---

अल्लाहका आदेशले मुख फर्काउनुको औचित्य बनाउनु अनुचित (गलत) थियो, आख़िर उनको सहायताको आदेश दिने पनि त अल्लाह नै थिए, यसकारण उसको प्रसन्नता त यसैमा छ कि निर्धन एवं दरिद्रहरुको सहायता गरियोस् । यसकारण चाहत अर्कै कुरो हो तथा प्रसन्नता अर्कै कुरो । चाहतको सम्बन्ध उत्पत्ति विषयसित छ जसका अधीन जे-जति पनि हुन्छ, त्यसको नीति तथा रहस्यलाई अल्लाहका अतिरिक्त कोही जान्दैन तथा प्रसन्नताको सम्बन्ध धार्मिक विषयहरुसित हुन्छ, जसलाई पूरा गर्न हामीलाई आदेश दिइएको छ ताकि हामीलाई त्यसको प्रसन्नता प्राप्त होस् ।

[1]अर्थात् मानिस बजारहरुमा क्रय-विक्रय तथा वाद-विवादमा व्यस्त हुनेछन् कि सहसा नरसिंघा फुकिनेछ एवं केयामत व्याप्त हुनेछ । यो प्रथम फुक हुनेछ, यसलाई نفخة فزع (घवराहटको फूँक) पनि भन्दछन् । भनिन्छ कि यसका पश्चात दोस्रो फूँक हुनेछ । नफ़खतुस्साक (बेहोशीको फूँक) जसबाट अल्लाह तआ़लाका अतिरिक्त सबै मृत्युका काखमा गइहाल्नेछन् ।

[2]प्रथम कथनका आधारमा यो نفخة ثانية (दोस्रो फूँक) तथा अर्को कथनानुसार यो نفخة ثالثة (तेस्रो फूँक) हुनेछ जसलाई نفخة البعث والنشور (जीवित हुनु एवं उठ्नुको फूँक) भन्दछन्, यसबाट मानिस चिहानहरुबाट जीवित भई उभिनेछन् (इब्ने क़सीर)

[3]चिहानको शयनकक्ष भन्नुबाट तात्पर्य यो होइन कि चिहानमा उनलाई दण्ड हुनेछैन बरु तत्पश्चात जो भयानक दृश्य तथा यातनाको कठोरता देख्नेछन् त्यसको तुलनामा उनीहरुलाई कब्र (चिहान) को जीवन एउटा स्वप्न नै प्रतीत हुनेछ ।

هٰذَا مَا وَعَدَ الرَّحۡمٰنُ وَصَدَقَ الۡمُرۡسَلُوۡنَ ﴿٥٢﴾

जसको वजन दयालुले दिएको थियो तथा रसूलहरुले साँचो-साँचो भनिदिएका थिए ।

اِنۡ كَانَتۡ اِلَّا صَيۡحَةً وَّاحِدَةً فَاِذَا هُمۡ جَمِيۡعٌ لَّدَيۡنَا مُحۡضَرُوۡنَ ﴿٥٣﴾

(५३) त एउटा ठूलो चित्कार हुनेछ । अनि के देख्नेछन् कि उनी सबै हाम्रा सामु उपस्थित गरिनेछ ।

فَالۡيَوۡمَ لَا تُظۡلَمُ نَفۡسٌ شَيۡـًٔا وَّلَا تُجۡزَوۡنَ اِلَّا مَا كُنۡتُمۡ تَعۡمَلُوۡنَ ﴿٥٤﴾

(५४) त आज कुनै व्यक्तिमाथि अलिकति पनि अत्याचार गरिने छैन तथा तिमीलाई प्रतिफलमा केही प्राप्त हुनेछ जो तिमी गर्दैआइराखेका थियौ ।

اِنَّ اَصۡحٰبَ الۡجَنَّةِ الۡيَوۡمَ فِىۡ شُغُلٍ فٰكِهُوۡنَ ﴿٥٥﴾

(५५) नि:सन्देह स्वर्गवाला मानिसहरु आजका दिन आफ्ना (मनोरञ्जन) कार्यहरुमा व्यस्त, प्रफुल्लित एवं आनन्दित छन् ।[1]

هُمۡ وَاَزۡوَاجُهُمۡ فِىۡ ظِلٰلٍ عَلَى الۡاَرَآئِكِ مُتَّكِـُٔوۡنَ ﴿٥٦﴾

(५६) उनी तथा उनका पत्नीहरु छायाँमा (मसहरिहरुमा) तकियामा अडेस लिई बसेका हुनेछन् ।

لَهُمۡ فِيۡهَا فَاكِهَةٌ وَّلَهُمۡ مَّا يَدَّعُوۡنَ ﴿٥٧﴾

(५७) उनीहरुका लागि स्वर्गमा हरेक प्रकारका फलहरु हुनेछन् तथा अन्य पनि जो उनीहरु माँग्नेछन् ।

سَلٰمٌ قَوۡلًا مِّنۡ رَّبٍّ رَّحِيۡمٍ ﴿٥٨﴾

(५८) कृपालु प्रभुको तर्फबाट उनलाई 'सलाम' भनिनेछ ।[2]

وَامۡتَازُوا الۡيَوۡمَ اَيُّهَا الۡمُجۡرِمُوۡنَ ﴿٥٩﴾

(५९) तथा हे पापीहरु ! आज तिमी अलग्ग भईहाल ।[3]

---

[1] فاكِهُونَ को अर्थ فرحُونَ हो अर्थात् प्रफुल्लित, आनन्दित ।

[2] अल्लाहको यो सलाम फरिश्ताहरु स्वर्गवासीहरुलाई पुऱ्याउनेछन्, केही ज्ञाताहरुको भनाई छ कि अल्लाह तआला (परमेश्वर) स्वयं सलाम भन्नेछ ।

[3] अर्थात् ईमानवालाहरुबाट अलग्ग उभिउ । अर्थात् मैदाने महशर (एकत्रित हुनुका क्षेत्र) मा ईमान्दार तथा आज्ञाकारी, नास्तिक एवं अवज्ञाकारी अलग-अलग गरिदिइनेछन् । जस्तै

(६०) हे आदमका सन्तान ! के मैले तिमीबाट वचन लिएको थिइन कि तिमी शैतानको उपासना नगर्नु,[1] त्यो त तिम्रो खुल्ला शत्रु हो ।[2]

أَلَمْ أَعْهَدْ إِلَيْكُمْ يَٰبَنِيٓ ءَادَمَ أَن لَّا تَعْبُدُوا۟ ٱلشَّيْطَٰنَ ۖ إِنَّهُۥ لَكُمْ عَدُوٌّ مُّبِينٌ ۝

(६१) तथा मेरै इबादत (उपासना) गर्नु,[3] सोझो मार्ग यही हो ।[4]

وَأَنِ ٱعْبُدُونِى ۚ هَٰذَا صِرَٰطٌ مُّسْتَقِيمٌ ۝

(६२) तथा शैतानले त तिमीमध्ये अधिकतर समूहहरुलाई विचलित गरिदिए, के तिमीसित बुद्धि छैन ।[5]

وَلَقَدْ أَضَلَّ مِنكُمْ جِبِلًّا كَثِيرًا ۖ أَفَلَمْ تَكُونُوا۟ تَعْقِلُونَ ۝

अर्को स्थानमा भन्यो ﴿وَيَوْمَ تَقُومُ ٱلسَّاعَةُ يَوْمَئِذٍ يَتَفَرَّقُونَ﴾ (अर्रूम-१४) ﴿يَوْمَئِذٍ يَصَّدَّعُونَ﴾ (अर्रूम-४३) أى يصيرون صدعين فرقتين "त्यस दिन मानिसहरु दुई समुदायहरुमा विभाजित हुनेछन्" दोस्रो अभिप्राय यो हो कि अपराधीहरुलाई नै विभिन्न समूहहरुमा अलग-अलग गरी दिइनेछ, जस्तै यहूदीहरुको समूह, इसाईहरुको समूह, साबीहरुको समूह, अग्निपूजकहरुको समूह, व्यभिचारीहरु, मदिरापान गर्नेहरुको समूह इत्यादि ।

[1]यसबाट तात्पर्य عهد الست छ, जो वचन आदमको पिठ्यूँबाट निकाल्नुका समय लिएको थियो अथवा त्यो वसीयत हो जो पैग़म्वरहरुका मुखबाट मानिसहरुलाई गर्ने गरियो । तथा केही विद्वानहरुको यहाँ त्यो बौद्धिक तर्क हो जो आकाश तथा धर्तीमा अल्लाहले स्थापित गरेका छन् । (फ़तहुल क़दीर)

[2]यो त्यसको कारण हो कि तिमीलाई शैतानको वन्दना तथा त्यसको शंसय मान्नुबाट यसकारण रोकिएको थियो कि त्यो तिम्रो खुल्ला शत्रु हो, तथा त्यसले तिमीलाई पथभ्रष्ट गर्नुको शपथ लिएको छ ।

[3]अर्थात् यो पनि वचन लिएको थियो कि मात्र मेरै बन्दना गर्नु, मेरो बन्दनामा कसैलाई साझीदार नबनाउनु ।

[4]अर्थात् मात्र एक अल्लाहको आराधना गर्नु, यही त्यो सोझो मार्ग हो जसतिर सबै अम्बियाले बोलाउँदै गरे तथा यही अभिष्ट स्थान अर्थात स्वर्गसम्म पुऱ्याउने छ ।

[5]अर्थात् यति पनि बुद्धि तिमीमा छैन कि शैतान तिम्रो शत्रु हो, त्यसको कुरा मान्नु हुँदैन तथा म तिम्रो प्रभु हूँ, म नै तिमीलाई जीविका प्रदान गर्दछु तथा म नै तिम्रो रातदिन रक्षा गर्दछु । अत: तिमीले मेरो आज्ञा मान्नुपर्छ । तिमी शैतानको शत्रुता

هَٰذِهِۦ جَهَنَّمُ ٱلَّتِي كُنتُمۡ تُوعَدُونَ ٦٣

(६३) यही त्यो नरक हो जसको बारे तिमीलाई वचन दिइन्थ्यो ।

ٱصۡلَوۡهَا ٱلۡيَوۡمَ بِمَا كُنتُمۡ تَكۡفُرُونَ ٦٤

(६४) आफ्ना कुफ्रका प्रतिफल गर्नका निम्ति आज यसमा प्रवेश गरिहाल ।[1]

ٱلۡيَوۡمَ نَخۡتِمُ عَلَىٰٓ أَفۡوَٰهِهِمۡ وَتُكَلِّمُنَآ أَيۡدِيهِمۡ وَتَشۡهَدُ أَرۡجُلُهُم بِمَا كَانُواْ يَكۡسِبُونَ ٦٥

(६५) हामीले आजका दिन उनका मुखमा मुद्राहरु (छाप) लगाइदिनेछौं तथा उनका हात हामीसित कुरा गर्नेछन् तथा उनका खुट्टा साक्ष्य दिनेछन् । उनका कार्यहरुको जो उनी गर्दथे ।[2]

وَلَوۡ نَشَآءُ لَطَمَسۡنَا عَلَىٰٓ أَعۡيُنِهِمۡ فَٱسۡتَبَقُواْ ٱلصِّرَٰطَ فَأَنَّىٰ يُبۡصِرُونَ ٦٦

(६६) तथा यदि हामी चाहेको भए त उनका आँखा अन्धो गरिदिन्थे, अनि यिनीहरु मार्गतिर दौडन्थे परन्तु उनीहरु कसरी देख्दथे ?[3]

तथा मेरो बन्दनाका अधिकारलाई नसम्भेर अनि निर्बोध तथा मूर्खताको प्रदर्शन गरिराखेका छौ ।

[1]अर्थात् अब त्यस मूर्खताको फल भोग्नेछौ तथा आफ्ना कुफ्र (इन्कार) का कारण नरकको कडा यातनाको स्वाद चाख ।

[2]यो मुद्रा (मोहर) लगाउनुको आवश्यकता यसकारण हुनेछ कि आरम्भमा मुशरेकीन (द्वैयतवादी) प्रलयका दिन पनि झूठ बोल्नेछन्, तथा भन्नेछन् ।

﴿وَٱللَّهِ رَبِّنَا مَا كُنَّا مُشۡرِكِينَ﴾

"अल्लाहको कसम जो हाम्रो प्रभु हो, हामी मिश्रणवादी (मुश्रिक) थिएनौं ।" (अल-अन्आम-२३)

तसर्थ अल्लाहले उनका अनुहारमा मोहर लगाइदिनेछ जसबाट उनी त स्वयं बोल्ने शक्तिबाट बञ्चित हुनेछन् । हो, अल्लाह तआला (ले) मानवीय अङ्गहरुलाई बोल्ने शक्ति प्रदान गर्नेछ । हातहरु बोल्नेछन् कि हामीबाट यसले अमूक-अमूक काम गरेको थियो तथा खुट्टा साक्षी हुनेछन् । भनौं यसरी स्वीकार्य तथा साक्ष्य दुबै समस्याहरुको समाधान भइहाल्नेछ यसका अतिरिक्त बोल्नेहरुका विपरीत अनबोल वस्तुहरुको साक्ष्य दिनु युक्ति एवं तर्कमा अधिक प्रभावी छ किनकि यसमा एउटा चमत्कारी दशा पाइन्छ । (फ़तहुल कदीर) । यस विषयको बारेमा अहादीसमा पनि वर्णन गरिएको छ । (हेर्नुस् सहीह मुस्लिम, किताबुज़्ज़ुहद)

[3]अर्थात् दृष्टिबाट बञ्चित हुनुका पश्चात उनलाई मार्ग कसरी देखिन्थ्यो ? किन्तु यो त हाम्रो सहनशीलता एवं दया हो कि हामीले यस्तो गरेनौं ।

وَلَوْ نَشَاءُ لَمَسَخْنَاهُمْ عَلَىٰ مَكَانَتِهِمْ فَمَا اسْتَطَاعُوا مُضِيًّا وَلَا يَرْجِعُونَ ﴿٦٧﴾

(६७) यदि हामीले चाहेको भए उनका स्थानमा नै उनका मुख विकृत गरिदिन्थ्यौं, अनि न उनी हिंड्डुल गर्नसक्थे तथा न फर्कन सक्थे ।[1]

وَمَنْ نُعَمِّرْهُ نُنَكِّسْهُ فِي الْخَلْقِ ۖ أَفَلَا يَعْقِلُونَ ﴿٦٨﴾

(६८) तथा जसलाई हामी बुढा गर्दछौं त्यसलाई जन्मका समयको अवस्थातिर पुन: फर्काइदिन्छौं,[2] के तैपनि उनीहरु बुझ्दैनन् ?[3]

وَمَا عَلَّمْنَاهُ الشِّعْرَ وَمَا يَنْبَغِي لَهُ ۚ إِنْ هُوَ إِلَّا ذِكْرٌ وَقُرْآنٌ مُبِينٌ ﴿٦٩﴾

(६९) तथा न त हामीले यस पैग़म्बरलाई काव्य सिकायौं तथा न यो त्यसको योग्य छ । यो त केवल शिक्षा तथा स्पष्ट कुर्आन हो ।[4]

[1]अर्थात् न अगाडी जान सक्थे न पछाडी फर्कन सक्थे बरु पत्थरका समान एउटा स्थानमा उभिरहन्थे । مَسْخ (मस्ख) जन्ममा परिवर्तनबारे छन्, अर्थात् मानवबाट पत्थर अथवा शत्रुका रुपमा परिवर्तन गरिदिनु ।

[2]अर्थात् हामी जसलाई दीर्घ आयु दिन्छौं, त्यसको जन्मलाई परिवर्तन गरेर विपरीत स्थितिमा गरिदिन्छौं । अर्थात जब त्यो बच्चा हुन्छ त ठूलो भईरहन्छ तथा त्यसको मानसिक एवं शारीरिक शक्तिमा प्रगति भइरहन्छ । यहाँसम्मकि त्यो युवा परिपक्क आयुतिर पुग्दछ । त्यसका पश्चात त्यसका विपरीत मानसिक तथा शारीरिक शक्तिमा दूर्बलता एवं पतनको कार्य आरम्भ हुन्छ यहाँसम्मकि त्यो एउटा बच्चाका समान हुनजान्छ ।

[3]कि जो अल्लाह यसप्रकार गर्नसक्छ के त्यो पुन: मानिसहरुलाई जीवित गर्नमा समर्थ छैन ?

[4]मक्काका मूर्तिपूजक नबी सल्लल्लाहु अलैहि वसल्लमका विषयमा विभिन्न कुरा गरिरहन्थे । तिनमा एउटा कुरो यो पनि थियो कि उहाँ कवि हुनुहुन्छ तथा यो पवित्र कुर्आन उहाँको कविताको तुकबन्दी हो । अल्लाहले त्यसको खण्डन गऱ्यो कि उहाँ कवि हुनुहुन्छ, न पवित्र कुर्आन कविताको संग्रह हो, बरु यो मात्र नसीहत एवं शिक्षा हो । कवितामा साधारणत: अतिश्योक्ति तथा मात्र कल्पनाहरुको विचित्रता हुन्छ । यो भनौं कि झूठमा आधारित हुन्छ । यसबाहेक कवि मात्र कुराका वीर हुन्छन् कर्मका होइनन् । यसकारण अल्लाह तआला (परमेश्वर) ले भन्नुभयो कि हामीले आफ्नो पैग़म्बरलाई काव्य सिकाएनौं न कविताको उसतिर (वह्य) गऱ्यौं, बरु त्यसको स्वभाव एवं प्रकृति यस्तो बनायौं कि त्यसको

لِّيُنذِرَ مَن كَانَ حَيًّا وَيَحِقَّ الْقَوْلُ عَلَى الْكَافِرِينَ ۝٧٠

(७०) ताकि त्यसले प्रत्येक त्यस व्यक्तिलाई सावधान गरिदेओस् जो जीवित छ[1] तथा काफिरहरुलाई सत्य (तर्क) सिद्ध हुनजाओस् ।[2]

أَوَلَمْ يَرَوْا أَنَّا خَلَقْنَا لَهُم مِّمَّا عَمِلَتْ أَيْدِينَا أَنْعَامًا

(७१) के उनीहरु देख्दैनन् कि हामीले आफ्ना हातद्वारा बनाइएका[3] वस्तुहरुमध्ये उनका लागि चौपायाहरु (पशु[4] (पनि) पैदा गरिदियौं, जसका यिनीहरु

काव्यसित कुनै सम्बन्ध नै छैन । यही कारण छ कि जब तपाईं उहाँ कसैको कविता पढ्नु हुन्थ्यो त अधिकांश सही पढ्नु हुन्नथ्यो तथा त्यसको सन्तुलन भङ्ग हुन्थ्यो, जसका उदाहरण हदीसमा विद्यमान छन् । यो सावधानी यसकारणले गरियो कि इन्कार गर्नेहरुका लागि तर्क पूरा गरियोस् तथा उनका शंकाहरुको निवारण गरियोस् तथा उनीहरु यो भन्न नसकून् यो कुर्आन त्यसको कविता तुकबन्दीको परिणाम हो । जस्तो उहाँको अनभिज्ञता पनि शंका निवारणका लागि छ ताकि मानिसहरु यस सन्दर्भमा यो भन्न नसकून् कि यो त उसले अमूकबाट सिकी पढेर यसको संकलन गरिहालेको छ । हो, केही अवसरहरुमा उहाँका पवित्र मुखारबाट यस्ता शब्दहरु निस्किहाल्नु जो काव्यका दुई चरणहरुका सदृश्य हुन्थे तथा कविता वजन एवं छन्दहरुका पनि अनुरुप हुन्थे, उहाँको कवि हुने कुरोको प्रमाण बन्न सक्दैन, किनकि यस्तो उहाँका इच्छा तथा संकल्प बिना भयो तथा यिनी कविताका साँचोमा ढल्नु एउटा संयोग थियो, जस्तै हुनैनका दिन उहाँका मुखबाट अकस्मात यो एउटा छन्द प्रस्फुटित भयो ।

أَنَا النَّبِيُّ لَا كَذِبْ - أَنَا ابْنُ عَبْدِالْمُطَّلِبْ

"म नबी हुँ झूठा होइन, म अब्दुल मुत्तालिबका पुत्रमध्ये हुँ ।"

तथा एउटा अर्को अवसरमा उहाँको औंला घायल भए पश्चात उहाँले भन्नुभयो: هَلْ أَنْتِ إِلَّا إِصْبَعٌ دَمِيتِ - وَفِي سَبِيلِ اللهِ مَا لَقِيتِ "तिमी मात्र एउटा औंला हौ जसको रगत बगाइयो जबकि तिमीलाई अल्लाहको मार्गमा शहादत प्राप्त भएन ।" (सहीह बुख़ारी, किताबुल जिहाद)

[1]अर्थात् जसको हृदय स्वच्छ हुन्छ, सत्यलाई स्वीकार गर्दछ तथा असत्यलाई नकार्दछ ।

[2]अर्थात् जो कुफ्रमा दुराग्रही हुन्छ, त्यसमाथि यातनाको कथन सिद्ध हुनजाओस् । نَعَمْ मा सर्वनाम पवित्र कुर्आनतिर फर्कन्छ ।

[3]यसबाट अरुहरुको साझेदारीलाई नकारेको छ उनलाई हामीले आफ्ना हातद्वारा बनाएका छौं कुनै अरुको तिनलाई बनाउनमा साझा छैन ।

[4] أنعام बहुवचन हो نَعَمْ को । यसबाट अभिप्राय चौपायाहरु हुन्, अर्थात् ऊंट, गाई, बाख्रा (भेंडा तथा गुम्बाहरु) ।

فَمِنْهَا رَكُوبُهُمْ وَمِنْهَا يَأْكُلُونَ

स्वामी भएका छन् ।[1]

وَذَلَّلْنَٰهَا لَهُمْ فَمِنْهَا رَكُوبُهُمْ وَمِنْهَا يَأْكُلُونَ ﴿٧٢﴾

(७२) तथा ती (पशुहरु) लाई हामीले उनका वशमा गरिदिएका छौं[2] जसमध्ये केही त उनका सवारीहरु हुन् तथा केहीका मासु खान्छन् ।

وَلَهُمْ فِيهَا مَنَٰفِعُ وَمَشَارِبُ ۖ أَفَلَا يَشْكُرُونَ ﴿٧٣﴾

(७३) तथा उनीहरुलाई तिनीहरुबाट अन्य पनि धेरै लाभ छन्[3] एवं पेय वस्तुहरु । के तै (पनि) यिनीहरु कृतज्ञता व्यक्त गर्दैनन् ?

وَاتَّخَذُوا مِن دُونِ اللَّهِ ءَالِهَةً لَّعَلَّهُمْ يُنصَرُونَ ﴿٧٤﴾

(७४) तथा तिनीहरु अल्लाहका अतिरिक्त अरुहरुलाई उपास्य बनाउँछन् कि उनको सहायता गरियोस् ।[4]

لَا يَسْتَطِيعُونَ نَصْرَهُمْ وَهُمْ لَهُمْ جُندٌ مُّحْضَرُونَ ﴿٧٥﴾

(७५) (यद्यपि) तिनीहरुमा उनीहरुको सहायताको शक्ति छैन तैपनि (मूर्तिपूजक) उनको उपस्थिति सेना हुन् ।[5]

---

[1]अर्थात् जस्तो चाहन्छन् उनीबाट काम लिन्छन् । हामीले यदि उनीहरुमा जङ्गलीपना राखिदिएको भए (जस्तो कि केही पशुहरुमा छ) उनीहरु तिनीहरुबाट टाढा भाग्दथे तथा उनका स्वामित्व एवं अधिकारमा आउन्नथे ।

[2]अर्थात् यी जनावरहरुबाट उनीहरु जस्तो चाहन्छन् लाभ प्राप्त गर्दछन्, उनीहरु इन्कार गर्दैनन्, यहाँसम्मकि उनीहरुलाई वध गरिदिन्छन् तथा साना बच्चाहरु पनि उनीहरु तान्दै हिंड्छन् ।

[3]अर्थात् सवारी तथा खानुका अतिरिक्त पनि धेरै लाभ प्राप्त गर्दछन्, जस्तै उनका ऊन तथा रौंहरुबाट कैयन् कुराहरु बनाउँछन् । उनको बोसोबाट तेल प्राप्त हुन्छ तथा यिनी भारवाहन एवं खेतीपातीमा पनि काम लाग्छन् ।

[4]यो उनको कृतघ्नताको वर्णन हो कि उपरोक्त अनुकम्पाहरु, जसबाट यिनी लाभान्वित हुन्छन्, सबै अल्लाहद्वारा पैदा गरिएका हुन् । किन्तु यिनीहरु अल्लाहका यी अनुकम्पाहरुमाथि जसको कृतघ्नताको ठाउँमा अर्थात् बन्दना तथा आज्ञाकारिताका अतिरिक्त यिनीहरु अरुहरुबाट आशा राख्दछन् तथा उनीहरुलाई आराध्य बनाउँछन् ।

[5] جُندٌ सित अभिप्राय मूर्तिहरुका पक्षधर उनका रक्षक हुन्, مُحْضَرُونَ जगत्मा उनका निकट उपस्थित रहने । अभिप्राय यो हो कि यिनीहरु जुन मूर्तिहरुलाई पूज्य ठान्छन् तिनीहरु उनको सहायता के गर्नेछन् ? उनीहरु त स्वयं आफ्नो सहायता गर्नबाट विवश छन् । उनीहरुलाई कसैले नराम्रो भनोस्, उनीहरुको भर्त्सना

فَلَا يَحْزُنْكَ قَوْلُهُمْ ۘ إِنَّا نَعْلَمُ مَا يُسِرُّونَ وَمَا يُعْلِنُونَ ﴿٧٦﴾

(७६) अतः तपाईंलाई उनका कुराले शोकग्रस्त नगरोस्, हामी उनका गुप्त तथा प्रकट सबै कुरालाई (राम्ररी) जान्दछौं ।

أَوَلَمْ يَرَ الْإِنسَانُ أَنَّا خَلَقْنَاهُ مِن نُّطْفَةٍ فَإِذَا هُوَ خَصِيمٌ مُّبِينٌ ﴿٧٧﴾

(७७) के मानिसलाई यति पनि ज्ञान छैन कि हामीले उसलाई वीर्यबाट पैदा गरेका छौं ? तैपनि यो खुल्ला झगडालु बनिहाल्यो ।

وَضَرَبَ لَنَا مَثَلًا وَنَسِيَ خَلْقَهُ ۖ قَالَ مَن يُحْيِي الْعِظَامَ وَهِيَ رَمِيمٌ ﴿٧٨﴾

(७८) तथा उसले हाम्रा लागि उदाहरण वर्णन गऱ्यो तथा आफ्नो (मूल) उत्पत्तिलाई बिर्सिदियो, भन्नलाग्यो कि यी सडेगलेका अस्थिहरुलाई कसले जीवित गर्न सक्दछ ।

قُلْ يُحْيِيهَا الَّذِي أَنشَأَهَا أَوَّلَ مَرَّةٍ ۖ وَهُوَ بِكُلِّ خَلْقٍ عَلِيمٌ ﴿٧٩﴾

(७९) भनिदिनुस् कि उनीहरुलाई त्यसले जीवित गर्नेछ जसले उनीहरुलाई प्रथम पटक पैदा गऱ्यो,[1] जो सबै प्रकारको सृष्टिलाई राम्ररी जान्दछ ।

الَّذِي جَعَلَ لَكُم مِّنَ الشَّجَرِ الْأَخْضَرِ نَارًا فَإِذَا أَنتُم مِّنْهُ تُوقِدُونَ ﴿٨٠﴾

(८०) त्यही हो जसले तिम्रा लागि हरियो वृक्षबाट अग्नि पैदा गऱ्यो जसबाट तिमी आगो सल्काउन्छौ ।[2]

---

गरोस् त यिनै उनका पक्ष तथा रक्षामा संलग्न हुन्छन् न कि स्वयं उनका उपास्य ।

[1]अर्थात् जो अल्लाह एउटा हीन वीर्यबाट मानिसलाई पैदा गर्नसक्छ, जसलाई पुर्नजीवित गर्न समर्थ छैन ? त्यसद्वारा मूर्दाहरुलाई जीवित गर्नको एउटा कथा हदीसमा वर्णित छ कि एउटा व्यक्तिले निधनका समय यो वसीयत गऱ्यो कि मर्नुका पश्चात त्यसलाई पोलेर आधा खरानी समुद्रमा तथा आधा खरानी प्रचण्ड वायुका दिन थलमा उडाइदिइयोस् । अल्लाहले सबै खरानी एकत्र गरी यसलाई जीवन प्रदान गऱ्यो तथा उसँग सोध्यो कि तिमीले यस्तो किन गऱ्यौ ? उसले भन्यो तिम्रो भयले, अल्लाहले त्यसलाई क्षमा गरिदियो । (सहीह बुख़ारी, किताबुल अम्बिया)

[2]भनिन्छ कि अरबमा दुईटा वृक्ष छन्, मूर्ख तथा अफार । यिनका काठ परस्पर रगडिन्छ भने आगो उत्पन्न हुन्छ । हरियो वृक्षबाट आगो उत्पन्न गर्नुका प्रसङ्गले यसैतिर संकेत अभिप्राय छ ।

أَوَلَيْسَ الَّذِي خَلَقَ السَّمَٰوَٰتِ وَالْأَرْضَ بِقَٰدِرٍ عَلَىٰٓ أَن يَخْلُقَ مِثْلَهُم ۚ بَلَىٰ وَهُوَ الْخَلَّٰقُ الْعَلِيمُ ﴿٨١﴾

(८१) जसले आकाशहरु तथा धर्तीलाई सृष्टि गरेको छ, के त्यो यिनी जस्तोका[1] सृष्टि गर्न समर्थ छैन ? निश्चय समर्थ छ तथा त्यही त रचयिता ज्ञाता हो ।

إِنَّمَآ أَمْرُهُۥٓ إِذَآ أَرَادَ شَيْـًٔا أَن يَقُولَ لَهُۥ كُن فَيَكُونُ ﴿٨٢﴾

(८२) जब त्यसले कुनै वस्तुको इरादा (इच्छा) गर्दछ त्यसलाई यति भन्दिनु (पर्याप्त) छ कि भइहाल, त्यो तत्क्षण हुन्छ ।

فَسُبْحَٰنَ الَّذِي بِيَدِهِۦ مَلَكُوتُ كُلِّ شَيْءٍ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٨٣﴾

(८३) त पवित्र छ[2] त्यो अल्लाह जसका हातमा प्रत्येक वस्तुको राज्यमा छ तथा जसतिर[3] तिमी सबै फर्काइनेछौ ।

---

[1]अर्थात् मानिसहरुजस्तै । अभिप्राय मानिसहरुलाई पुन: जीवित गर्नु हो जस्तो प्रथम पटक पैदा गऱ्यो । आकाशहरु तथा धर्तीको सृष्टिबाट मानिसलाई पुन: जीवन प्रदान गर्नुको प्रमाण दिएको छ । जस्तै अर्को स्थानमा भन्यो:

﴿لَخَلْقُ السَّمَٰوَٰتِ وَالْأَرْضِ أَكْبَرُ مِنْ خَلْقِ النَّاسِ﴾

"आकाशहरु तथा धर्तीको रचना मानव रचनाभन्दा अधिक कठिन कार्य हो ।" (अल-मोमीन-५७)

सूर: अहकाफ़मा पनि यस विषयको वर्णन छ ।

[2]अर्थात् उसको महिमा त यो हो, अनि उसका लागि सबै मानिसलाई जीवित गरिदिनु कुन चाहिं कठिन विषय हो ?

[3] مُلك तथा ملكوت दुवै समानार्थक छन् अर्थात राज्य, जस्तै رحمة तथा رحموت، رهبة तथा جبر، رهبوت तथा جبروت आदि (इब्ने कसीर) । केही ज्ञाताहरु यसलाई अतिश्योक्तिका रुप मान्दछन् । (फ़तहुल क़दीर) अर्थात ملكوت अतिश्योक्ति हो مُلك को ।

[4]अर्थात् यो हुनेछैन कि माटोमा मिसिएर तिम्रो अस्तित्व सदाका लागि समाप्त हुनजाओस् । होइन, बरु पुन: जीवन प्रदान गरिनेछ, यो पनि हुनेछैन कि यिनी भागेर कुनै अन्यको शरण प्राप्त गर । तिमीलाई प्रत्येक स्थितिमा अल्लाहकै सदनमा उपस्थित हुनुपर्नेछ, जहाँ त्यसले कर्महरुका अनुसार राम्रो-नराम्रो प्रतिफल प्रदान गर्नेछ ।

## سُوْرَةُ الصَّافَّاتِ

## सूरतुस्साफ़्फ़ात-३७

सूर: साफ़्फ़ात मक्कामा अवतरित भएको, यसमा एक सय बयासी आयतहरु तथा पाँच रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

وَالصّٰٓفّٰتِ صَفًّا ۙ﴿١﴾

(१) सौगन्ध छ पंक्तिबद्ध हुने (फरिश्ताहरु) को ।

فَالزّٰجِرٰتِ زَجْرًا ۙ﴿٢﴾

(२) अनि पूर्णरुपले हप्काउनेहरुको ।

فَالتّٰلِيٰتِ ذِكْرًا ۙ﴿٣﴾

(३) अनि अल्लाहको पाठ गर्नेहरुको ।

اِنَّ اِلٰهَكُمْ لَوَاحِدٌ ؕ﴿٤﴾

(४) वस्तुत: तिमी सबैको पूज्य एउटै छ ।[1]

رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا وَرَبُّ الْمَشَارِقِ ؕ﴿٥﴾

(५) आकाशहरु तथा धर्ती एवं उनका मध्येका समस्त वस्तुहरु तथा समस्त पूर्वी दिशाहरुको उही प्रभु हो ।[2]

---

[1] صافّات ، زاجرات ، تاليـــات (फरिश्ताहरु) का गुण हुन् आकाशहरुमा अल्लाहको इबादत (उपासना) का लागि पंक्तिबद्ध हुनेहरु अथवा अल्लाहका आदेशको प्रतीक्षामा पंक्तिबद्ध, शिक्षा-दीक्षाद्वारा मानिसहरुलाई हप्काउने अथवा मेघहरुलाई जहाँ अल्लाहको आदेश हुन्छ त्यहाँ हाँकेर लैजानेहरु । अल्लाहका स्मरण अथवा पवित्र कुर्आनको पाठ गर्नेहरु । यी फरिश्ता (स्वर्गदूतहरु) को शपथ लिएर अल्लाहले यस विषयको वर्णन गरेको छ कि समस्त मानव जातिको उपास्य एउटै छ अनेक होइन, जस्तो कि मूर्तिपूजकहरुले बनाएका छन् । साधारण परिभाषामा शपथ, जोड दिन तथा शंका निवारणका लागि ग्रहण गरिन्छ । अल्लाह तआलाले यहाँ शपथ त्यही शंकाका निवारणका लागि लिएको छ जो मूर्तिपूजक उसको एकता एवं उपास्य हुने विषयमा प्रचार गर्छन् । यसका अतिरिक्त, प्रत्येक वस्तु अल्लाहद्वारा रचित एवं त्यसको स्वामित्वमा छ, अत: त्यसले जुन वस्तुलाई पनि साक्षी बनाएर त्यसको कसम खाओस् त्यसका लागि उचित छ । परन्तु मनुष्यका लागि अल्लाहका अतिरिक्त कसैको कसम खानु पूर्णत: अनुचित तथा निषेध छ, किनकि कसमहरु जुन कुरोको खाइन्छ, त्यसलाई साक्षी बनाउनु उद्देश्य हुन्छ, तथा साक्षी अल्लाहका अतिरिक्त कोही बन्न सक्दैन, किनकि परोक्षको जानकार केवल त्यही छ । त्यसका अतिरिक्त परोक्षका जानकार कोही छैन ।

[2] अभिप्राय हो पश्चिम तथा पूर्व दिशाहरुको प्रभु । बहुवचनको शब्द यसकारणले प्रयोग भएको छ कि केही ज्ञाताहरु भन्दछन् कि वर्षका दिनहरुको संख्याका बराबर पूर्व एवं पश्चिम छन् ।

إِنَّا زَيَّنَّا السَّمَاءَ الدُّنْيَا بِزِينَةٍ الْكَوَاكِبِ ﴿٦﴾

(६) हामीले संसारका (निकट) आकाशलाई ताराहरुबाट सुशोभित एवं अलंकृत गरेका छौं ।

وَحِفْظًا مِّن كُلِّ شَيْطَانٍ مَّارِدٍ ﴿٧﴾

(७) तथा (हामीले नै त्यसको) प्रत्येक उद्दण्ड शैतानबाट सुरक्षा गरेका छौं ।[1]

لَّا يَسَّمَّعُونَ إِلَى الْمَلَإِ الْأَعْلَىٰ وَيُقْذَفُونَ مِن كُلِّ جَانِبٍ ﴿٨﴾

(८) उच्च संसार (परलोक) का फरिश्ताहरु (का कुरा) सुन्नका लागि उनीहरु कान पनि थाप्न सक्दैनन् बरु चारैतिरबाट उनीहरु मारिन्छन् ।

دُحُورًا وَلَهُمْ عَذَابٌ وَاصِبٌ ﴿٩﴾

(९) धपाउनका लागि तथा उनका लागि स्थायी यातना छ ।

إِلَّا مَنْ خَطِفَ الْخَطْفَةَ فَأَتْبَعَهُ شِهَابٌ ثَاقِبٌ ﴿١٠﴾

(१०) परन्तु जो एकाध कुरा लिएर भाग्छन् त (तुरुन्तै) त्यसका पछाडी प्रज्वलित आगोको ज्वाला लागिहाल्छ ।

فَاسْتَفْتِهِمْ أَهُمْ أَشَدُّ خَلْقًا أَم مَّنْ

(११) यी काफ़िरहरुसित सोध्नुछ त कि उनलाई पैदा गर्न अधिक कठिन छ अथवा जसलाई

त्यस्तै दुई पूर्व एवं पश्चिमबाट तात्पर्य ती दुई पूर्व तथा पश्चिम हुन् जसबाट सूर्य गर्मी तथा जाडोमा उदय एवं अस्त हुन्छ, अर्थात् एउटा अत्यन्त अन्तिम पूर्व तथा पश्चिम, अर्को संक्षिप्त वा निकटतम् पूर्व तथा पश्चिम । तथा जहाँ पूर्व तथा पश्चिमका एक वचन वर्णन गरिएको छ, त्यसबाट अभिप्राय त्यो दिशा हो जसबाट सूर्य उदय हुन्छ अथवा अस्त हुन्छ (फ़तहुल क़दीर)

[1]अर्थात् संसारका आकाशमा, शोभाका अतिरिक्त ताराहरुको दोस्रो उद्देश्य यो हो कि उद्दण्ड शैतानहरुबाट सुरक्षा होस् । त जब शैतान आकाशमा कुनै कुरा सुन्नका लागि जान्छन् त ताराहरु उनीमाथि टुक्रिएर खस्छन्, जसबाट साधारणत: शैतान पोलिन्छन् जस्तो कि आगामी आयत तथा हदीसहरुबाट स्पष्ट छ । ताराहरुको एउटा तेस्रो उद्देश्य रात्रिका अन्धकारमा मार्ग दर्शाउनु पनि हो, जस्तो कि क़ुरआनमा अर्को स्थानमा वर्णन गरिएको छ । यी ती नै उद्देश्यका अतिरिक्त ताराहरुको कुनै अरु उद्देश्य भनिएको छैन ।

فَاسْتَفْتِهِمْ أَهُمْ أَشَدُّ خَلْقًا أَم مَّنْ خَلَقْنَا ۚ إِنَّا خَلَقْنَاهُم مِّن طِينٍ لَّازِبٍ ⑪

हामीले पैदा गरेका छौ ?[1] हामीले त मनुष्यलाई लेसिलो माटोबाट पैदा गरेका छौं ।[2]

بَلْ عَجِبْتَ وَيَسْخَرُونَ ⑫

(१२) बरु तिमी आश्चर्य गरिराखेका छौ तथा यिनीहरु उपहास गरिराखेका छन् ।[3]

وَإِذَا ذُكِّرُوا لَا يَذْكُرُونَ ⑬

(१३) तथा जब उनीहरुलाई शिक्षा दिइन्छ तब उनीहरु मान्दैनन् ।

وَإِذَا رَأَوْا آيَةً يَسْتَسْخِرُونَ ⑭

(१४) तथा जब कुनै उपचारलाई चमत्कार देख्छन् त उपहास गर्दछन् ।

وَقَالُوا إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُّبِينٌ ⑮

(१५) तथा भन्दछन् कि यो त पूर्णरुपमा प्रत्यक्ष जादू नै हो ।[4]

أَإِذَا مِتْنَا وَكُنَّا تُرَابًا وَعِظَامًا أَإِنَّا لَمَبْعُوثُونَ ⑯

(१६) के जब हामी मरिहाल्नेछौं तथा माटो एवं हाड भइहाल्नेछौं त्यसपछि के (वास्तवमा) हामी जीवित गरिनेछौं ?

[1]अर्थात् हामीले जो धर्ती, फरिश्ता तथा आकाश जस्तो वस्तुहरु बनाएका छौं जो आफ्नो स्थूलता एवं विस्तारमा अति विचित्र छन्, के यिनीहरुलाई पैदा गर्नु एवं पुन: पैदा गर्नु ती वस्तुहरु सृष्टि गर्नबाट अधिक कठिन छ ? निश्चय छैन ।

[2]अर्थात् उनका बाबा आदमलाई त हामीले माटोबाट सृष्टि गरेका छौं । अभिप्राय यो हो कि यो मानव जाति परलोकका जीवनलाई यति असंम्भव किन ठान्दछ जबकि त्यसको सृष्टि एउटा अति तुच्छ एवं कमजोर वस्तुबाट भएको हो, जबकि सृष्टिमा त्यसभन्दा अधिक शक्तिशाली एवं महान तथा पूर्ण वस्तुहरुको सृष्टिबाट उनलाई इन्कार छैन । (फ़तहुल क़दीर)

[3]अर्थात् तपाईंलाई आख़िरत (परलोक) इन्कार गर्नेहरुमाथि आश्चर्य भइराखेको छ कि त्यसको सम्भावना वरु अनिवार्यताका यति प्रत्यक्ष प्रमाणका उपरान्त त्यसलाई किन मानिराखेका छैनन् तथा उनी तपाईंको केयामतका दावीको उपहास गरिराखेका छन् कि यो कसरी सम्भव छ ।

[4]अर्थात् यो उनको रीति हो कि शिक्षा ग्रहण गर्दैनन्, तथा कुनै स्पष्ट युक्ति अथवा चमत्कार प्रस्तुत गरिन्छ त हाँसोमा उडाइदिन्छन् तथा त्यसलाई जादू भन्दछन् ।

أَوَآبَاؤُنَا الْأَوَّلُونَ ﴿١٧﴾

(१७) अथवा हामीभन्दा पहिलाका हाम्रा पूर्वज पनि ?

قُلْ نَعَمْ وَأَنتُمْ دَاخِرُونَ ﴿١٨﴾

(१८) (तपाईं) उत्तर दिनुस् कि हो, तथा तिमी अपमानित (पनि) हुनेछौ ।[1]

فَإِنَّمَا هِيَ زَجْرَةٌ وَاحِدَةٌ فَإِذَا هُمْ يَنظُرُونَ ﴿١٩﴾

(१९) त्यो त केवल एउटा जोडदार झपार हुनेछ[2] कि सहसा यिनीहरु देख्न थाल्नेछन् ।[3]

وَقَالُوا يَا وَيْلَنَا هَٰذَا يَوْمُ الدِّينِ ﴿٢٠﴾

(२०) तथा भन्नेछन् कि अफसोच, हाम्रो विनाश यही प्रतिफलको दिन हो ।

هَٰذَا يَوْمُ الْفَصْلِ الَّذِي كُنتُم بِهِ تُكَذِّبُونَ ﴿٢١﴾

(२१) यही निर्णयको दिन हो जसलाई तिमी झुठो भन्दैरहयौ ।[4]

---

[1]जस्तो कि अर्को स्थानमा पनि भन्नुभयो :

﴿وَكُلٌّ أَتَوْهُ دَاخِرِينَ﴾

"सब उसका सदनमा निरादार भई जानेछन् ।" (अन्नमल-८७)

﴿إِنَّ الَّذِينَ يَسْتَكْبِرُونَ عَنْ عِبَادَتِي سَيَدْخُلُونَ جَهَنَّمَ دَاخِرِينَ﴾

"जो मानिस मेरो उपासनाबाट इन्कार गर्दछन् शीघ्र नै उनी अपमानित भई प्रवेश गर्नेछन् ।" (अल-मोमिन-६०)

[2]अर्थात् उनी अल्लाहका एउटै आदेश तथा इस्राफ़ीलको एउटै फूँक (दोस्रो पटकको फूँक) बाट कब्रहरु (चिहान) बाट निस्केर जीवित भई उभिनेछन् ।

[3]अर्थात् उनका सामु केयामतका भयानक दृश्य तथा मैदान महशरका कठिनाईहरु हुनेछन् जसलाई उनीहरु देख्नेछन् । फूँक अथवा चित्कारलाई زجرة (झपार) भनिएको छ, किनकि त्यसबाट उद्देश्य झपार नै हो ।

[4]ويـلا (वैल) शब्द विनाशका अवसरमा भनिन्छ, अर्थात् यातनाका दर्शनका पश्चात उनीहरुलाई आफ्नो विनाश प्रत्यक्ष रुपमा देखिराखिएको हुनेछ, तथा यसबाट अभिप्राय लज्जाको प्रदर्शन तथा आफ्ना दोषहरुको इकरार (स्वीकार) हो । किन्तु यस समय लज्जा एवं स्वीकारको कुनै लाभ हुनेछैन । अत: यसका उत्तरमा फरिश्ता तथा ईमान भएकाहरुले भन्नेछन् कि यो त्यही निर्णयको दिन

أُحْشُرُوا الَّذِينَ ظَلَمُوا وَأَزْوَاجَهُمْ وَمَا كَانُوا يَعْبُدُونَ ﴿٢٢﴾

(२२) अत्याचारीहरुलाई[1] तथा उनका साथीहरुलाई[2] तथा ज-जसको उनीहरु (अल्लाहका अतिरिक्त) पूजा गर्दथे ।[3]

مِن دُونِ اللَّهِ فَاهْدُوهُمْ إِلَىٰ صِرَاطِ الْجَحِيمِ ﴿٢٣﴾

(२३) (ती सबैलाई) एकत्रित गरी उनलाई नरकको मार्ग देखाइदेउ ।

وَقِفُوهُمْ إِنَّهُم مَّسْئُولُونَ ﴿٢٤﴾

(२४) तथा उनीहरुलाई रोकिराख[4] (यसकारण) कि उनीसित आवश्यक प्रश्न गरिनेछन् ।

مَا لَكُمْ لَا تَنَاصَرُونَ ﴿٢٥﴾

(२५) के कारण छ कि (यस बेला) तिमी एक-अर्काको सहायता गर्दैनौ ।

بَلْ هُمُ الْيَوْمَ مُسْتَسْلِمُونَ ﴿٢٦﴾

(२६) बरु उनीहरु (सबै) आज आज्ञाकारी बनिहाले ।

---

हो जसलाई तिमी मान्दैनथ्यौ । यो पनि संभव छ कि परस्पर एक-अर्कासित भन्नेछन् ।

[1]अर्थात् जसले कुफ्र एवं शिर्क तथा आज्ञा उल्लंघन गरे । यो अल्लाहको तर्फबाट आदेश हुनेछ ।

[2]यसबाट अभिप्राय कुफ्र एवं शिर्क तथा रसूलहरुलाई झुठ्लाउनेहरुका साथी अथवा केही ज्ञाताहरुका निकट जिन्न तथा शैतान हुन्, तथा केही भन्छन् कि ती पत्नीहरु हुन् जो कुफ्र तथा शिर्कमा उनीसित सहमत थिए ।

[3] مَا (मा) सबै पूज्यहरुका लागि छन् चाहे ती मूर्तिहरु होऊन् अथवा अल्लाहका पुनीत भक्त, सबैलाई उनलाई अपमानित गर्नका लागि एकत्रित गरिनेछ । तैपनि सदाचारीहरुलाई त अल्लाह महान नरकबाट टाढा नै राख्नेछ । तथा अन्य उपास्यहरुलाई नरकमा उनका साथ नै हुर्रयाइदिइनेछ ताकि उनीहरु देखिहालून् कि यिनी कसैलाई लाभ-हानि पुऱ्याउन समर्थ छैनन ।

[4]यो आदेश नरकमा लैजानुभन्दा पूर्व हुनेछ किनकि उनी हिसाबका पश्चात नै नरकमा जानेछन् ।

وَأَقْبَلَ بَعْضُهُمْ عَلَىٰ بَعْضٍ يَتَسَاءَلُونَ ﴿٢٧﴾

(२७) उनी एक-अर्कालाई सम्बोधित गरेर प्रश्नोत्तर गर्न थाल्नेछन् ।

قَالُوا إِنَّكُمْ كُنتُمْ تَأْتُونَنَا عَنِ الْيَمِينِ ﴿٢٨﴾

(२८) भन्नेछन् कि तिमी त हाम्रा पासमा हाम्रा दायाँतिरबाट आउँथ्यौ ।[1]

قَالُوا بَل لَّمْ تَكُونُوا مُؤْمِنِينَ ﴿٢٩﴾

(२९) उनीहरु उत्तर दिनेछन् कि होइन, बरु तिमी नै ईमानवाला थिएनौ ।[2]

وَمَا كَانَ لَنَا عَلَيْكُم مِّن سُلْطَانٍ ۖ بَلْ كُنتُمْ قَوْمًا طَاغِينَ ﴿٣٠﴾

(३०) तथा केही हाम्रो प्रभुत्व तिमीमाथि थियो (नै) होइन । बरु तिनीहरु (स्वयं) उद्दण्ड मानिसहरु थिए ।[3]

فَحَقَّ عَلَيْنَا قَوْلُ رَبِّنَا ۖ إِنَّا لَذَائِقُونَ ﴿٣١﴾

(३१) अब त हामी (सबै) माथि हाम्रा प्रभुको यो कुरा सिद्ध भइसक्यो कि हामी (यातनाको) स्वाद चाख्नेछौं ।

فَأَغْوَيْنَاكُمْ إِنَّا كُنَّا غَاوِينَ ﴿٣٢﴾

(३२) त हामीले तिमीलाई पथभ्रष्ट गर्‍यौं हामी त स्वयं पनि पथभ्रष्ट नै थियौं ।[4]

---

[1]यसको अभिप्राय हो कि धर्म तथा सत्यका नामबाट आउँथे अर्थात् विश्वास दिलाउँथे कि यही मूल एवं सत्य धर्म हो । तथा केही ज्ञाताहरुका निकट अभिप्राय यो हो कि प्रत्येक दिशाबाट आउँथे, والشمال (तथा बायाँबाट लुप्त छ । जसरी शैतानले भनेको थियो । "म उनका अगाडी-पछाडी, दायाँ-बायाँ हरेकतिरबाट उनका पासमा आउनेछु तथा उनीहरुलाई विचलित गर्नेछु ।" (अल-आराफ़-१७)

[2]अगुवाले भन्नेछन् कि ईमान तिमी आफ्नो इच्छाले स्वीकार गरेनौं तथा आज दोष हामीलाई दिइराखेका छौ ?

[3]अगुवा तथा अनुगामीहरुको यो परस्पर विवाद पवित्र कुर्आनका कैयन् स्थानमा चर्चित छ । उनको परस्पर निन्दा महशरका मैदानमा हुनेछ तथा नरकमा जानुका पश्चात नरक़मा पनि । हेर्नुस् अल-मोमिन-४७,४८, सूर: सबा-३१,३२, अल-आराफ़-३८, ३९ आदि आयतहरु ।

[4]अर्थात् जुन कुरालाई पहिला नकारे कि हाम्रो तिमीमाथि कुनचाहिं प्रभाव थियो कि तिमीलाई पथभ्रष्ट गर्‍यौं अब त्यसको यहाँ स्वीकार छ कि वस्तुत: हामीले तिमीलाई विचलित गरेका थियौं । किन्तु यो स्वीकार यस चेतावनीको साथ गरे कि यस प्रकरणमा हाम्रो निन्दा नगर । यसकारण कि हामी स्वयं विचलनमा थियौं । हामीले तिमीलाई आफू समान बनाउन चाहयौं तथा तिमीले सरलताले हाम्रो मार्ग अप्नाइहाल्यो, जस्तो शैतानले पनि त्यस दिन भन्नेछ :

فَإِنَّهُمْ يَوْمَئِذٍ فِي الْعَذَابِ مُشْتَرِكُونَ ﴿٣٣﴾

(३३) तसर्थ आजका दिन (सबै) यातनामा हिस्सेदार छन् ।[1]

إِنَّا كَذَٰلِكَ نَفْعَلُ بِالْمُجْرِمِينَ ﴿٣٤﴾

(३४) हामी पापीहरुसँग यसैप्रकार गर्दछौं ।[2]

إِنَّهُمْ كَانُوا إِذَا قِيلَ لَهُمْ لَا إِلَٰهَ إِلَّا اللَّهُ يَسْتَكْبِرُونَ ﴿٣٥﴾

(३५) ती त्यसता (मानिस) हुन् कि जब उनीसित भनिन्छ कि अल्लाहका अतिरिक्त कोही पूज्य छैन, त यिनी अहङ्कार गर्दथे ।[3]

وَيَقُولُونَ أَئِنَّا لَتَارِكُو آلِهَتِنَا لِشَاعِرٍ مَجْنُونٍ ﴿٣٦﴾

(३६) तथा भन्दथे कि के हामी आफ्ना देवताहरुलाई एउटा दिवाना कविको तुलना छाडिदेऔं ?[4]

---

﴿وَمَا كَانَ لِيَ عَلَيْكُمْ مِنْ سُلْطَانٍ إِلَّا أَنْ دَعَوْتُكُمْ فَاسْتَجَبْتُمْ لِي فَلَا تَلُومُونِي وَلُومُوا أَنْفُسَكُمْ﴾

(इब्राहीम-२२)

[1]यसकारण कि उनको अपराध पनि एउटै जस्तो छ, शिर्क, अवज्ञा तथा आतङ्क एवं उपद्रव यी सबैको व्यवहार थियो ।

[2]अर्थात् प्रत्येक प्रकारका पापीहरुसँग हाम्रो यही व्यवहार छ र उनी सबै हाम्रा दण्ड भोग्नेछन् ।

[3]अर्थात् संसारमा जब उनीसित भनिन्थ्यो कि जुनप्रकारले मुसलमानहरुले यो धर्म सूत्र لا إله إلا الله محمد رسول الله (ला एलाहा इल्लल्लाहु मोहम्मदुर्रसुलुल्लाह) पढेर शिर्क तथा अवज्ञाबाट क्षमा माँगे, तिमी पनि पढ ताकि तिमी संसारमा पनि मुसलमानहरुका क्रोध तथा रिसबाट बच तथा आख़िरतमा पनि अल्लाहको यातनासित तिम्रो सामना नहोस्, त उनी अभिमान तथा अहंकार गर्दथे एवं इन्कार गर्दथे । नबी सल्लल्लाहु अलैहि वसल्लमको वचन छ :

«أُمِرْتُ أَنْ أُقَاتِلَ النَّاسَ حَتَّى يَقُولُوا: لَا إِلَهَ إِلَّا اللهُ، فَمَنْ قَالَ: (لا إله إلا الله) فَقَدْ عَصَمَ مِنِّي مَالَهُ وَنَفْسَهُ»

"मलाई यस कुराको आदेश दिइएको छ कि म त्यस समयसम्म मानिसहरुसित संघर्ष गरुँ जबसम्म उनी لا إله إلا الله लाई स्वीकार नगरून् । जसले यो अंगीकार गऱ्यो उसले आफ्ना प्राण तथा मालको रक्षा गरिहाल्यो ।" (मुत्तफ़कुन् अलैह- किताबुल ईमान)

[4]अर्थात् उनीहरुले नबी सल्लल्लाहु अलैहि वसल्लमलाई कवि तथा दीवाना भने तथा उहाँका आमन्त्रणलाई दिवानगी तथा पवित्र कुरआनलाई काव्य भने तथा भने कि हामी एउटा

بَلْ جَآءَ بِالْحَقِّ وَصَدَّقَ الْمُرْسَلِيْنَ ﴿٣٧﴾

(३७) (होइन, होइन) बरु नबी त हक़ (सत्यधर्म) ल्याएका छन् तथा समस्त रसूलहरुलाई सत्य जान्दछन् ।[1]

اِنَّكُمْ لَذَآئِقُوا الْعَذَابِ الْاَلِيْمِ ﴿٣٨﴾

(३८) नि:सन्देह तिमी कष्टदायी यातनाहरुका (स्वाद) चाख्नेहरु हौ ।

وَمَا تُجْزَوْنَ اِلَّا مَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٣٩﴾

(३९) तथा तिमीलाई यसैको फल-प्रतिफल दिइनेछ जो तिमी गर्दैआएका थियौ ।[2]

اِلَّا عِبَادَ اللّٰهِ الْمُخْلَصِيْنَ ﴿٤٠﴾

(४०) परन्तु अल्लाह (तआ़ला) का शुद्ध निर्वाचित भक्त ।[3]

اُولٰٓئِكَ لَهُمْ رِزْقٌ مَّعْلُوْمٌ ﴿٤١﴾

(४१) उनैका लागि निर्धारित जीविका छ ।

فَوَاكِهُ وَهُمْ مُّكْرَمُوْنَ ﴿٤٢﴾

(४२) (हरेक प्रकारका) फलहरु तथा उनी सम्मानित तथा आदरणीय हुनेछन् ।

فِيْ جَنّٰتِ النَّعِيْمِ ﴿٤٣﴾

(४३) सुखमय स्वर्गहरुमा

---

दीवानाका उन्मादमा आफ्ना पूज्यहरुको त्याग किन गरौं । हाँलाकि यो उन्माद होइन चेतना थियो, कविता होइन यथार्थता थियो तथा यस आमन्त्रणलाई मानिलिनुमा उनको विनाश होइन मुक्ति थियो ।

[1]अर्थात् तिमी हाम्रा पैग़म्बरलाई कवि तथा दीवाना भन्दछौ, जबकि वास्तविकता यो हो कि त्यसले जे-जति ल्यायो तथा प्रस्तुत गरिराखेको छ त्यो सत्य छ, तथा त्यही कुरो हो जो त्यसभन्दा पहिला सबै अम्बिया प्रस्तुत गर्दैरहेका छन् । के यो काम कुनै दीवाना अथवा कुनै कविको कल्पनाको परिणाम हुनसक्छ ?

[2]यो नरकवासीहरुसित त्यस समय भनिनेछ जब उनी उभेर परस्पर प्रश्न गरिराखेका हुनेछन् तथा साथै स्पष्ट गरिदिइनेछ कि यो अत्याचार होइन सर्वथा न्याय हो किनकि यो सब तिम्रा आफ्ना कर्तुतहरुको प्रतिफल हो ।

[3]अर्थात् यातनाबाट सुरक्षित हुनेछन्, उनका आलस्यलाई पनि क्षमा गरिदिइनेछ यदि कोही छ । तथा एक-एक पुण्यको प्रतिफल कैयन् गुना दिइनेछ ।

(४४) आसनहरुमा एक-अर्काका सम्मुख आसीन हुनेछन् । عَلَىٰ سُرُرٍ مُّتَقَٰبِلِينَ ٤٤

(४५) प्रवाहित मदीराहरुका प्यालाहरुको उनीमाथि दौड चलिराखेको हुनेछ ।[१] يُطَافُ عَلَيْهِم بِكَأْسٍ مِّن مَّعِينٍ ٤٥

(४६) जो सफा सेतो तथा पिउनमा स्वादिष्ट हुनेछ ।[२] بَيْضَآءَ لَذَّةٍ لِّلشَّٰرِبِينَ ٤٦

(४७) न त्यसबाट टाउको दुख्नेछ न त्यो पिउनाले बहकिन्छन् ।[३] لَا فِيهَا غَوْلٌ وَلَا هُمْ عَنْهَا يُنزَفُونَ ٤٧

(४८) तथा उनका निकट आँखा तल झुकेका एवं ठूला-ठूला आँखा भएका (हूरहरु)[४] हुनेछन् । وَعِندَهُمْ قَٰصِرَٰتُ ٱلطَّرْفِ عِينٌ ٤٨

(४९) यस्ता जस्तो लुकाएका अण्डाहरु ।[५] كَأَنَّهُنَّ بَيْضٌ مَّكْنُونٌ ٤٩

(५०) (स्वर्गवालाहरु) एक-अर्कातिर मुख पारेर सोध्नेछन् ।[६] فَأَقْبَلَ بَعْضُهُمْ عَلَىٰ بَعْضٍ يَتَسَآءَلُونَ ٥٠

---

[१] كأس (कास) मदिराले भरिएका प्यालालाई तथा قدح (कदह) रिक्त प्यालालाई भन्दछन् । مَعِين को अर्थ हो प्रवाहित स्रोत, अभिप्राय यो हो कि प्रवाहित स्रोतको जस्तै स्वर्गमा मदिरा प्रत्येक समय सुलभ रहनेछ ।

[२] संसारमा मदिरा साधारणत: कुरङ्ग हुन्छ, स्वर्गमा त्यो जस्तो स्वादिष्ट हुनेछ, राम्रो रङ्गको पनि हुनेछ ।

[३] अर्थात् संसारको मदिराको जस्तो यसमा वान्ता, मस्तिष्क पीडा, उन्माद तथा वहकिने भय हुनेछैन ।

[४] ठूला आँखा सौन्दर्यका लक्षण हुन्, अर्थात् सुन्दर आँखा हुनेछन् ।

[५] अर्थात् शुतुरमुर्गका पखेटाका मुनि लुकाइएका होऊन्, जसका कारण तिनी वायु एवं फोहोर-मैलावाट सुरक्षित होऊन् । भनिन्छ कि शुतुरमुर्गका अण्डा निकै सुन्दर रङ्गका हुन्छन्, जो पहेंला स्वेत हुन्छन् तथा यस्ता रङ्ग सौन्दर्य तथा सुन्दर ताका संसारमा सवभन्दा उत्तम मानिन्छ । यस आधारमा यो उपमा केवल सफेदीमा वरु सुन्दर रङ्ग एवं रुप तथा दृश्यमा छ ।

[६] स्वर्गवासी स्वर्गमा एक-अर्काका साथ बसेर संसारमा घटनाहरु सम्झनेछन् तथा परस्पर सुनाउनेछन् ।

قَالَ قَآئِلٌ مِّنْهُمْ إِنِّي كَانَ لِي قَرِينٌ ﴿٥١﴾

(५१) उनीहरुमध्ये एउटा भन्नेछ कि मेरो एउटा निकट (साथी) थियो ।

يَقُولُ أَئِنَّكَ لَمِنَ الْمُصَدِّقِينَ ﴿٥٢﴾

(५२) जो (मसित) भन्ने गर्थे कि के तिमी (केयामत आउने कुरालाई) विश्वास गर्ने मध्येका हौ ।[1]

أَءِذَا مِتْنَا وَكُنَّا تُرَابًا وَعِظَامًا أَءِنَّا لَمَدِينُونَ ﴿٥٣﴾

(५३) के जबकि हामी मरेर माटो एवं अस्थि भइहाल्नेछौं के त्यस समय हामी प्रतिफल दिइनेवाला हौं ?[2]

قَالَ هَلْ أَنتُم مُّطَّلِعُونَ ﴿٥٤﴾

(५४) भन्नेछन्, तिमी चाहन्छौ कि चिहाएर हेरिहाल ?[3]

فَاطَّلَعَ فَرَآهُ فِي سَوَآءِ الْجَحِيمِ ﴿٥٥﴾

(५५) चिहाउनासाथ त्यसलाई एकदम केन्द्रमा नरकमा (जलिराखेको) देख्नेछ ।

قَالَ تَاللَّهِ إِن كِدتَّ لَتُرْدِينِ ﴿٥٦﴾

(५६) भन्नेछ : अल्लाहको सौगन्ध ! निकट थियो कि तिमी मलाई पनि नष्ट गरिदिन्थ्यौ ।

وَلَوْلَا نِعْمَةُ رَبِّي لَكُنتُ مِنَ الْمُحْضَرِينَ ﴿٥٧﴾

(५७) तथा यदि मेरा प्रभुको अनुग्रह नभएको भए म पनि नरकमा उपस्थित गरिनेहरुमा हुने थिए ।[4]



[1]अर्थात् यो कुरआन उसले उपहास तथा परिहासका रुपमा गर्दथ्यो । अभिप्राय यो थियो कि यो त असम्भव छ, के यस्ता अनहोनी (नहुने) कुरामा तिमी विश्वास गर्दछौ ?

[2]अर्थात् हामीलाई जीवन प्रदान गरी हाम्रो हिसाब लिइनेछ अनि तद्अनुसार प्रतिफल दिइनेछ ।

[3]अर्थात् त्यो स्वर्गवासी आफ्ना स्वर्गका साथीहरुसित भन्नेछ कि के तिमी रुचाउँछौ कि अलिकति नरक़मा चिहाएर हेरूँ, सम्भवत: मसित यो कुरा गर्नेवाला त्यहाँ देखिन्छ भने तिमीलाई बताऊ कि यो व्यक्ति थियो जो यी कुरा गर्दथ्यो ।

[4]अर्थात् चिहाएपछि उसलाई नरक़का बीचमा त्यो व्यक्ति देखिनेछ तथा उससित जो स्वर्गवासी भन्नेछ कि मलाई पनि तिमी पथभ्रष्ट गरी बर्वाद गर्न लागेका थियौ यो त झण्डै ममाथि अल्लाहको दया भयो अन्यथा आज म पनि तिमीसँग नरक़मा हुन्थे ।

اَفَمَا نَحْنُ بِمَيِّتِيْنَ ۝٥٨

(५८) के (यो सही छ कि) हामी मर्ने नै होइनौं ?[१]

اِلَّا مَوْتَتَنَا الْاُوْلٰى وَمَا نَحْنُ بِمُعَذَّبِيْنَ ۝٥٩

(५९) प्रथम एक मृत्युका[२] अतिरिक्त, तथा न हामी यातना गरिनेहरु हौं ।

اِنَّ هٰذَا لَهُوَ الْفَوْزُ الْعَظِيْمُ ۝٦٠

(६०) अनि त (स्पष्ट कुरो छ कि) यो ठूलो सफलता हो ।[३]

لِمِثْلِ هٰذَا فَلْيَعْمَلِ الْعٰمِلُوْنَ ۝٦١

(६१) यस्ता (सफलता) का लागि कर्म गर्नेहरुलाई कर्म गर्नुपर्छ ।[४]

اَذٰلِكَ خَيْرٌ نُّزُلًا اَمْ شَجَرَةُ الزَّقُّوْمِ ۝٦٢

(६२) के यो अतिथि सत्कार राम्रो छ अथवा ज़क्कूम (क्याक्टस) को वृक्ष ?[५]

[१]नर्कवासीहरुको दशा देखेर स्वर्गवासीका मनमा विशेष प्रतिस्पर्धाको भावना उत्पन्न हुनेछ तथा भन्नेछ कि हामीलाई जो स्वर्गको जीवन तथा त्यसका वरदान प्राप्त छन्, के यो स्थायी होइन् तथा अब हामीलाई मृत्यु आउने छैन । यो सकारात्मक प्रश्न हो, अर्थात् अब यो जीवन स्थाई छ, स्वर्गवासी सदा स्वर्गमा तथा नर्कवासी आफ्नो पाप अनुसार नरकमा रहनेछन् न उनलाई मृत्यु आउनेछ कि नरकको यातनाबाट मुक्त हुन जाऊन् न हामीलाई कि यी स्वर्गका प्रदानहरुबाट बञ्चित होऔं । जुनप्रकार हदीसमा चर्चित छ कि मृत्युलाई एउटा भेंडाको रुपमा ल्याइ वध गरिनेछ कि अब कसैलाई मृत्यु आउने छैन ।

[२]जुन संसारमा आइसक्यो । अब न हाम्रा लागि न मृत्यु छ न यातना ।

[३]यसकारण कि नरकबाट बाँचिहाल्नु तथा स्वर्गका सुखहरुको पात्र बन्नुभन्दा बढी अरु के सफलता हुनेछ ?

[४]अर्थात् यस जस्तै सुख तथा यति महान दयाकै लागि श्रम गर्नेहरुलाई परिश्रम गर्नुपर्छ, यसकारण कि यही सर्वाधिक लाभप्रद व्यापार हो न कि जगतका लागि जो सामयिक हो तथा हानिको सौदा हो ।

[५]زَقُّوْم यो تَزَقُّم बाट बनेको छ, जसको अर्थ दुर्गन्धित तथा घृणित वस्तु निल्नुसित छ । यस वृक्षको फल खानु पनि नरकवासीहरुका लागि अति अप्रिय हुनेछ किनकि यो अति दुर्गन्धित, तितो तथा अत्यन्त घृणित हुनेछ । केही ज्ञाताहरु भन्छन् कि यो सांसारिक वृक्षहरुमध्ये हो, केही भन्छन् कि यो सांसारिक वृक्ष होइन तथा जगतवासीहरुका लागि अपरिचित हो । (फ़तहुल क़दीर)

إِنَّا جَعَلْنَٰهَا فِتْنَةً لِّلظَّٰلِمِينَ ﴿٦٣﴾

(६३) जसलाई हामीले अत्याचारीहरुका लागि कठोर परीक्षा बनाएका छौं ।[1]

إِنَّهَا شَجَرَةٌ تَخْرُجُ فِىٓ أَصْلِ ٱلْجَحِيمِ ﴿٦٤﴾

(६४) निःसन्देह त्यो वृक्ष नरक्को जराबाट निस्कन्छ ।[2]

طَلْعُهَا كَأَنَّهُۥ رُءُوسُ ٱلشَّيَٰطِينِ ﴿٦٥﴾

(६५) जसका थुङ्गा शैतानहरुका टाउका जस्ता हुन्छन् ।[3]

فَإِنَّهُمْ لَءَاكِلُونَ مِنْهَا فَمَالِـُٔونَ مِنْهَا ٱلْبُطُونَ ﴿٦٦﴾

(६६) नरक्वासी यसै वृक्षलाई खानेछन् तथा यसैबाट पेट भर्नेछन् ।[4]

ثُمَّ إِنَّ لَهُمْ عَلَيْهَا لَشَوْبًا مِّنْ حَمِيمٍ ﴿٦٧﴾

(६७) अनि त्यसमाथि उम्लिराखेको पानी पिउनु पर्नेछ ।[5]

ثُمَّ إِنَّ مَرْجِعَهُمْ لَإِلَى ٱلْجَحِيمِ ﴿٦٨﴾

(६८) अनि ती सबैको फर्काइ नरक् (अग्निको थुप्रो) को तिर हुनेछ ।[6]

---

किन्तु प्रथम कथन अधिक सही छ, तथा यो त्यही वृक्ष हो जसलाई उर्दू भाषामा सिउँडी अथवा थोहर भन्दछन् ।

[1]परीक्षा यसकारण कि यसको फल खानु स्वयं एउटा ठूलो परीक्षा हो । केही ज्ञाताहरुले यसकारणले परीक्षा भने कि उनी यो हुने कुरोलाई नकारिरहेका थिए कि नरक्मा चारैतिर आगो नै हुनेछ भने त्यहाँ रुख कसरी रहनसक्छ । यहाँ ظَالِمِين (अत्याचारीहरु) बाट अभिप्राय ती नरक्वासी हुन् जसका लागि नरक् अनिवार्य हुनेछ ।

[2]अर्थात् त्यसको जरा नरकको गहिराईमा हुनेछ, हो, त्यसका शाखाहरु सबैतिर फैलिएका हुनेछन् ।

[3]त्यसलाई नराम्रो एवं अशुभमा शैतानका टाउकोसित उपमा दिइयो । जस्तै राम्रो कुराका विषयमा भन्दछन् कि मानौं त्यो फरिश्ता हो ।

[4]यो उनीहरुले बडो घीनका साथ खानुपर्नेछ जसबाट स्पष्ट छ कि पेट गह्ङ्गो हुनेछन् ।

[5]अर्थात् खानुका पश्चात उनीहरुलाई पानीको इच्छा हुनेछ भने उम्लिराखेको तातो पानी उनीहरुलाई दिइनेछ जसलाई पिउनाले उनका आन्द्रा काटिनेछन् । (सूरः मोहम्मद-१५)

[6]अर्थात् ज़क्कूम खानु तथा उम्लिराखेको पानी पिउनका पश्चात उनीहरुलाई फेरि नरक्मा फ्याँकिनेछ ।

إِنَّهُمْ أَلْفَوْا آبَاءَهُمْ ضَالِّينَ ﴿٦٩﴾

(६९) विश्वास गर कि आफ्ना पूर्वजहरुलाई बहकिएको अवस्थामा पाए ।

فَهُمْ عَلَىٰ آثَارِهِمْ يُهْرَعُونَ ﴿٧٠﴾

(७०) तथा यिनी उनैका पदचिन्हहरुमा दगुर्दै अगाडी बढिरहे ।[1]

وَلَقَدْ ضَلَّ قَبْلَهُمْ أَكْثَرُ الْأَوَّلِينَ ﴿٧١﴾

(७१) तथा उनीभन्दा पूर्व पनि धेरै अधिका मानिस बहकिसकेका छन् ।[2]

وَلَقَدْ أَرْسَلْنَا فِيهِم مُّنذِرِينَ ﴿٧٢﴾

(७२) तथा जसमा हामीले सावधान गर्ने (रसूल) पठाएका थियौं ।[3]

فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُنذَرِينَ ﴿٧٣﴾

(७३) अब तिमी देखिहाल कि जसलाई धम्काइएको थियो उनको परिणाम कस्तो भयो ।

إِلَّا عِبَادَ اللَّهِ الْمُخْلَصِينَ ﴿٧٤﴾

(७४) अल्लाहका निर्वाचित भक्तहरुका अतिरिक्त ।[4]

---

[1]यो नरकको उपरोक्त यातनाहरुको कारण हो, कि आफ्ना बाबु-बाजेलाई विचलनमा पाए पनि उनका पद-चिन्हमा हिंड्रिहे तथा युक्ति एवं तर्कको तुलनामा अनुकरणलाई अप्नाउने गरे । إهراع यो إسراع को पर्यायवाची हो, अर्थात दगुर्नु तथा अति आग्रहले एवं अगाडी बढी कुनै वस्तुलाई समात्नु तथा अप्नाउनु ।

[2]अर्थात् यी नै गुमराह भएनन्, यिनीभन्दा पहिलाका मानिस पनि अधिकतर विचलनका मार्गमा हिंड्नेहरु थिए ।

[3]अर्थात् यिनीभन्दा पहिलाका मानिसहरुमा उनीहरुले सत्यको सन्देश पुऱ्याए तथा स्वीकार नगर्नुको दशामा उनीहरुलाई अल्लाहका प्रकोपबाट तर्साए किन्तु उनीमाथि कुनै प्रभाव भएन । परिणामस्वरुप, उनीहरुलाई नाश गरियो जस्तो कि आगामी आयतमा उनका शिक्षाप्रद परिणामतिर संकेत गरेको छ ।

[4]अर्थात् शिक्षाप्रद परिणामबाट मात्र उनीहरु सुरक्षित रहे जसलाई अल्लाहले ईमान एवं तौहीद (अद्वैत) को सौभाग्य प्रदान गऱ्यो । مُنذِرين (ती मानिसहरु जो दण्डबाट सुरक्षित रहे), مُخلِصين (विनाश हुने समुदाय) का संक्षिप्त वर्णनका पश्चात केही منذرين (सन्देष्टाहरुको) वर्णन गरिंदैछ ।

وَلَقَدْ نَادٰىنَا نُوْحٌ فَلَنِعْمَ الْمُجِيْبُوْنَ ﴿٧٥﴾

(७५) हामीलाई नूहले पुकारे त हेर कि हामी कति राम्रा प्रार्थना स्वीकार गर्नेवाला हौं।

وَنَجَّيْنٰهُ وَاَهْلَهٗ مِنَ الْكَرْبِ الْعَظِيْمِ ﴿٧٦﴾

(७६) तथा हामीले उसलाई तथा उसका घरवालाहरुलाई[२] त्यस घोर संकटबाट बचाइहाल्यौं।

وَجَعَلْنَا ذُرِّيَّتَهٗ هُمُ الْبٰقِيْنَ ﴿٧٧﴾

(७७) तथा त्यसको सन्तानलाई हामीले शेष रहने बनाइदियौं।[३]

وَتَرَكْنَا عَلَيْهِ فِى الْاٰخِرِيْنَ ﴿٧٨﴾

(७८) तथा हामीले त्यसको (प्रशंसा एवं सराहना) पछिल्लाहरुमा शेष राख्यौं।[४]

سَلٰمٌ عَلٰى نُوْحٍ فِى الْعٰلَمِيْنَ ﴿٧٩﴾

(७९) नूह (अलैहिस्सलाम) माथि सबै जगतमा सलाम (सुरक्षा) होस्!

---

[१]साढे नौ सय वर्षका धर्म प्रचारका उपरान्त पनि जब समुदायका अधिकांश मानिसहरुले उनलाई झुठ्लाए नै तथा उनले अनुभव गरे कि ईमान स्वीकार्नुको कुनै आशा छैन त आफ्ना प्रभुलाई पुकारे, ﴿ فَدَعَا رَبَّهٗٓ اَنِّيْ مَغْلُوْبٌ فَانْتَصِرْ ﴾ (अल-कमर-१०) "अल्लाह म परास्त छु मेरो सहायता गर" त हामीले नूहको विनय स्वीकार गर्यौं तथा उनको जातिलाई तूफान पठाएर नाश गरिदियौं।

[२](अहल) أهــل बाट अभिप्राय नूहमा ईमान स्वीकार गर्नेहरु हुन् जसमा उनका परिवारका मोमिन (ईमान्दार) सदस्य पनि थिए। केही भाष्यकारहरुका निकट उनको संख्या ८० थियो जसमा उनकी पत्नी तथा एक पुत्र सम्मिलित छैनन, जो ईमान भएका थिएनन्। उनीहरु पनि तूफानमा डुबिहाले। كرب عظيم घोर संकटबाट तात्पर्य त्यही ठूलो बाढी हो जसमा यो जाति डुबिहाले।

[३]अधिकतर भाष्यकारहरुका कथनानुसार आदरणीय नूहका तीन पुत्र थिए। हाम, साम तथा याफिस। यिनैबाट पछिको मानव वंश बढ्यो। यसैकारण नूहलाई दोस्रो आदम पनि भनिन्छ, अर्थात् आदमका समान उनका पश्चात यिनी मानव जातिका द्वितीय परमपिता हुन्। हामका वंशबाट सूडान (पूर्वबाट पश्चिमसम्म) अर्थात् सिन्ध, भारत नौब, जंज, हब्शा, किब्त तथा बर्बर आदि हुन् तथा यासीबका वंशबाट सक़ालिबा, तुर्क, खज़र तथा याजूज एवं माजूज आदि हुन्। सामका वंशबाट अरब, फारस, रूम तथा यहूद तथा इसाई हुन् (फ़तहुल क़दीर)। والله أعلم

[४]अर्थात् केयामत (प्रलय) सम्म आउने ईमानवालाहरुमा हामीले नूहको प्रशंसा एवं सराहनालाई शेष राख्यौं। उनी सबै ईशदूत नूहमाथि सलाम पठाउँछन् तथा पठाइरहनेछन्।

إِنَّا كَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ۝٨٠

(८०) हामीले पुण्य गर्नेहरुलाई यसैप्रकार प्रतिफल दिन्छौं ।

إِنَّهُ مِنْ عِبَادِنَا الْمُؤْمِنِينَ ۝٨١

(८१) त्यो हाम्रा ईमान्दार भक्तहरु मध्येबाट थियो ।[1]

ثُمَّ أَغْرَقْنَا الْآخَرِينَ ۝٨٢

(८२) अनि हामीले अन्य व्यक्तिहरुलाई डुबाइदियौं ।

وَإِنَّ مِن شِيعَتِهِ لَإِبْرَاهِيمَ ۝٨٣

(८३) तथा त्यस (नूह) का अनुयायीहरु मध्येबाटै इब्राहीम पनि थिए ।[2]

إِذْ جَاءَ رَبَّهُ بِقَلْبٍ سَلِيمٍ ۝٨٤

(८४) जबकि आफ्ना प्रभुका पास (निर्दोष) हृदयसित आए ।

إِذْ قَالَ لِأَبِيهِ وَقَوْمِهِ مَاذَا تَعْبُدُونَ ۝٨٥

(८५) उनले आफ्ना पिता तथा आफ्ना समुदायसित भनें कि तिमी के पूजिराखेका छौ ।

أَئِفْكًا آلِهَةً دُونَ اللَّهِ تُرِيدُونَ ۝٨٦

(८६) के तिमी अल्लाहका अतिरिक्त रचिएका पूज्य चाहन्छौ ?[3]

فَمَا ظَنُّكُم بِرَبِّ الْعَالَمِينَ ۝٨٧

(८७) त यो (भन कि) तिमीले समस्त जगत्‌का प्रभुलाई के ठानेका छौ ।[4]

---

[1]जुनप्रकार नूहको विनय स्वीकार गरी उनको सन्तानलाई शेष राख्यौं तथा पछिल्लाहरुमा उनको सराहना शेष राखेर हामीले सम्मान एवं आदर प्रदान गर्‍यौं, यसैप्रकार जो पनि आफ्ना कर्म तथा कथनमा सदाचारी तथा यस विषयमा सुदृढ एवं प्रसिद्ध हुनेछ, त्यसका साथ पनि हामी व्यवहार गर्नेछौं ।

[2] شِيعَة (शीअ:) को अर्थ समूह तथा अनुयायी हो अर्थात इब्राहीम पनि धर्मात्मा तथा एकेश्वरवादीहरुका समूहमा छन्, जसलाई आदरणीय नूहकै जस्तो अल्लाहले आफूतिर ध्यानमँग्न हुनुको विशेष सौभाग्य प्रदान गर्‍यो ।

[3]आफ्नो तर्फबाट नै झूठ रचेर कि यिनी आराध्य हुन्, तिमी अल्लाहलाई छाडेर उनको उपासना गर्दछौं जबकि यिनी पत्थर तथा मूर्तिहरु हुन् ।

[4]अर्थात् यति दूराचारका उपरान्त के अल्लाह तिमीसित क्रोधित हुनेछैन तथा तिमीलाई दण्ड छैन ?

| | |
|---|---|
| (८८) अब (इब्राहीमले) एक दृष्टि ताराहरुतिर गरे । | فَنَظَرَ نَظْرَةً فِي النُّجُومِ ﴿٨٨﴾ |
| (८९) तथा भने कि म त रोगी हूँ ।[1] | فَقَالَ إِنِّي سَقِيمٌ ﴿٨٩﴾ |
| (९०) यसपश्चात सबै त्यसबाट मुख फर्काइ फर्किहाले । | فَتَوَلَّوْا عَنْهُ مُدْبِرِينَ ﴿٩٠﴾ |
| (९१) उहाँ (विस्तारै) उनका पूज्यहरुका निकट गए तथा भन्नलागे तिमी किन खाँदैनौ ?[2] | فَرَاغَ إِلَىٰ آلِهَتِهِمْ فَقَالَ أَلَا تَأْكُلُونَ ﴿٩١﴾ |
| (९२) तिमीलाई के भएको छ कि कुरासम्म गर्दैनौ ? | مَا لَكُمْ لَا تَنْطِقُونَ ﴿٩٢﴾ |
| (९३) अनि त (पूरा शक्तिका साथ) दायाँ हातले उनलाई हिर्काउनमा लागिपरे ।[3] | فَرَاغَ عَلَيْهِمْ ضَرْبًا بِالْيَمِينِ ﴿٩٣﴾ |

[1]आकाशतिर चिन्तन-मननका लागि देखे जस्तो कि केही मानिस यस्तो गर्दछन्, अथवा आफ्ना जातिका मानिसहरुलाई भ्रममा पार्न हेतु यस्तो गरे जो ग्रहहरुको गतिलाई जगत्का घटनाहरुमा प्रभावी मान्दथे । यो घटना त्यस समयको हो जब उनको जातिका त्यो दिन आयो जसलाई त्यसले बाहिर गई ईद तथा जातीय उत्सवका रुपमा मनाउने गर्दथ्यो । जातिले माननीय इब्राहीमलाई पनि साथ हिंड्नुको निमन्त्रणा दिए । किन्तु इब्राहीम एकान्त तथा अवसरको खोजीमा थिए ताकि उनका प्रतिमाहरुलाई विनष्ट गर्न सकियोस् । अतः यस अवसरलाई शुभ ठाने कि भोलि पूरा जाति मेलामा गइहाल्नेछ तब म आफ्नो योजना पूरा गर्नेछु, तथा भनिदिएँ कि म रोगी छु अथवा आकाशहरुको गति भन्छ कि म बिरामी पर्नेछु । यो कुरा पूर्णतः मिथ्या त थिएन, प्रत्येक मनुष्य केही न केही रोगी त हुन्छ नै । यसका अतिरिक्त जातिको शिर्क इब्राहीमको हृदयको एउटा स्थाई रोग थियो जसलाई देखेर उनी असन्तुष्ट रहन्थे । हुन त आदरणीय इब्राहीमले अप्रत्यक्षता तथा संकेतको प्रदर्शन गरे जो यद्यपि मिथ्या हुँदैन किन्तु सम्बोधित त्यसका मनोगत अर्थले भ्रममा पर्नजान्छ । अतः حديث ثلاث كذبات का अर्न्तगत यसलाई मिथ्या भनियो, जस्तो कि यसको आवश्यक विवरण सूरः अम्बियामा गुज्रिसकेको छ ।

[2]अर्थात् जो प्रसाद त्यहाँ रहेका थिए त्यो उनलाई खानका लागि प्रस्तुत गरे जुन स्पष्ट कुरो हो कि उनले न खाएका थिए न खाए, बरु तिनी उत्तर दिनमा पनि समर्थ थिएन अतः उत्तर पनि दिएनन् ।

[3] رَاغَ को अर्थ हो مَالَ (निहुरियो) أقبل، ذهب यी सबै लगभग एकै जस्ता छन्, उनीतिर मोडिए ।

فَأَقْبَلُوٓا۟ إِلَيْهِ يَزِفُّونَ ﴿٩٤﴾

(९४) ती (मूर्तिपूजक) दगुर्दै उहाँतिर आए ।[1]

قَالَ أَتَعْبُدُونَ مَا تَنْحِتُونَ ﴿٩٥﴾

(९५) त्यसपछि उहाँले भन्नुभयो कि तिमी उनीहरुलाई पूज्दछौ जसलाई तिमी स्वयं बनाउँछौ ।

وَٱللَّهُ خَلَقَكُمْ وَمَا تَعْمَلُونَ ﴿٩٦﴾

(९६) यद्यपि तिमीलाई तथा तिमीबाट बनाइएका वस्तुहरुलाई अल्लाहले नै पैदा गरेको छ ।[2]

قَالُوا۟ ٱبْنُوا۟ لَهُۥ بُنْيَٰنًا فَأَلْقُوهُ فِى ٱلْجَحِيمِ ﴿٩٧﴾

(९७) उनीहरु भन्नथाले कि यसका लागि एउटा मकान (अग्निकुण्ड) बनाउ तथा त्यस (प्रज्वलित) अग्निमा यसलाई हालिदेउ ।

فَأَرَادُوا۟ بِهِۦ كَيْدًا فَجَعَلْنَٰهُمُ ٱلْأَسْفَلِينَ ﴿٩٨﴾

(९८) उनीहरुले त (इब्राहीम) सँग चाल चल्न चाहे परन्तु हामीले उनीहरुलाई नै तल पारिदियौं ।[3]

وَقَالَ إِنِّى ذَاهِبٌ إِلَىٰ رَبِّى سَيَهْدِينِ ﴿٩٩﴾

(९९) तथा (इब्राहीमले) भनें कि म त (हिज़रत गरेर) आफ्ना प्रभुतिर जाने भएको छु[4] त्यसले अवश्य मेरो मार्गदर्शन गर्नेछ ।

---

[1] يَزِفُّونَ यो يُسرِعون का अर्थमा छ, दगुर्दै आए । अर्थात् जब मेलाबाट आए त देखे कि उनका देवता छिन्न-भिन्न पारिराखेका छन् । तुरुन्त उनको विचार इब्राहीमतिर गयो । अतः उनलाई समातेर जनताका न्यायलयमा ल्याए । त्यहाँ आदरणीय इब्राहीमलाई यो अवसर प्राप्त भयो कि उनी तिनीहरुलाई उनको मूर्खता तथा उनका देवतागणको विवशतालाई स्पष्ट गरिदेऊन् ।

[2] अर्थात् ती मूर्तिहरु तथा चित्र पनि जसलाई तिमी आफ्ना हातले बनाउँछौ तथा उनलाई आराध्य ठान्दछौ अथवा तिम्रो साधारण कर्म जे पनि तिमी गर्दछौ, त्यसलाई उत्पत्ति गर्ने पनि अल्लाह हो जस्तो कि अहले सुन्नतको आस्था छ ।

[3] अर्थात् अग्निलाई उद्यान बनाएर उनीहरुका चाललाई असफल बनाइदियौं । अतः पवित्र छ त्यो अल्लाह जो आफ्ना भक्तहरुको काम बनाउँछ तथा परीक्षालाई प्रतिफल एवं नराम्रोलाई भलाईमा बदलिदिन्छ ।

[4] ईशदूत इब्राहीमको यो घटना बाबिल (इराक) मा घट्यो । अन्ततः यहाँबाट हिज़रत (स्थानान्तरण) गरे तथा शाम (सीरिया) गइहाले तथा त्यहाँ गई पुत्रका लागि प्रार्थना गरे । (फ़तहुल क़दीर)

رَبِّ هَبْ لِي مِنَ الصَّالِحِينَ ﴿١٠٠﴾

(१००) हे मेरा प्रभु ! मलाई सदाचारी पुत्र प्रदान गर ।

فَبَشَّرْنَاهُ بِغُلَامٍ حَلِيمٍ ﴿١٠١﴾

(१०१) त हामीले उसलाई एउटा सहनशील पुत्रको शुभसूचना दियौं ।[1]

فَلَمَّا بَلَغَ مَعَهُ السَّعْيَ قَالَ يَا بُنَيَّ إِنِّي أَرَىٰ فِي الْمَنَامِ أَنِّي أَذْبَحُكَ فَانظُرْ مَاذَا تَرَىٰ ۚ قَالَ يَا أَبَتِ افْعَلْ مَا تُؤْمَرُ ۖ سَتَجِدُنِي إِن شَاءَ اللَّهُ مِنَ الصَّابِرِينَ ﴿١٠٢﴾

(१०२) अनि जब (बालक) यस आयुमा पुग्यो कि त्यसका साथ हिंड्डुल गर्न सकोस्[2] त (त्यस इब्राहीम) ले भन्यो मेरा प्रिय पुत्र ! म स्वप्नमा आफूलाई तिम्रो बलि गर्दै देखिराखेको छु । अब तिमी भन कि तिम्रो के विचार छ ?[3] पुत्रले उत्तर दियो कि पिताजी ! जुन आदेश दिइराखिएको छ, त्यसको पालन गर्नुस् अल्लाहले चाहयो भने तपाईंले मलाई धैर्यवानहरुमध्ये पाउनु हुनेछ ।

فَلَمَّا أَسْلَمَا وَتَلَّهُ لِلْجَبِينِ ﴿١٠٣﴾

(१०३) अर्थात् जब दुबैले पालन (स्वीकार) गरिहाले तथा त्यस (पिता) ले त्यस (पुत्र) लाई[4] निधार तल पारी भूइँमा पल्टाइदिए

[1] حَلِيمٍ (धैर्यवान) भनेर संकेत गरिदियौं कि शिशु ठूलो भएर सहनशील हुनेछ ।

[2] अर्थात् दौडधूप गर्न योग्य भयो अथवा युवा अवस्थाका समीप भयो । केही ज्ञाताहरु भन्छन् कि त्यस समय यो बालक तेह्र वर्षको थियो ।

[3] पैग़म्बर (ईशदूत) को स्वप्न, अल्लाहको प्रकाशना तथा आदेश हुन्छ, जसका अनुसार कर्म गर्न आवश्यक हुन्छ, पुत्रसित विचार-विमर्शको उद्देश्य यो ज्ञात गर्नुहुन्छ कि पुत्र पनि अल्लाहको आदेश पूरा गर्नका लागि कति तयार छ ।

[4] प्रत्येक मनुष्यको मुख (अनुहार) मा आँखीभौं दायाँ-देब्रे हुन्छन्, तथा मध्येमा निधार अतः جَبْهَة यसकारण لِلْجَبِينِ को अधिक उचित अनुवाद (कोल्टो पारेर) पल्टाए, जुनप्रकार पशुलाई वध गर्दाखेरि किब्लातिर मुख फर्काइ पल्टाइन्छ, मस्तक अथवा मुखका बल, पल्टाउनुको अर्थ यसकारण गरिन्छ कि प्रसिद्ध छ कि आदरणीय इस्माईलले वसीयत गरे कि उनलाई यसप्रकार पल्टाइयोस् कि मुख

وَنَادَيْنَٰهُ أَن يَٰٓإِبْرَٰهِيمُ ﴿١٠٤﴾

(१०४) तब हामीले आवाज दियौं कि हे इब्राहीम !

قَدْ صَدَّقْتَ ٱلرُّءْيَآ ۚ إِنَّا كَذَٰلِكَ نَجْزِى ٱلْمُحْسِنِينَ ﴿١٠٥﴾

(१०५) निःसन्देह तिमीले स्वप्नलाई सत्य गरेर देखायौ,[1] निःसन्देह हामी पुण्यकारीहरुलाई यसैप्रकार प्रतिफल दिन्छौं ।

إِنَّ هَٰذَا لَهُوَ ٱلْبَلَٰٓؤُا۟ ٱلْمُبِينُ ﴿١٠٦﴾

(१०६) वास्तवमा यो स्पष्ट परीक्षा थियो ।[2]

وَفَدَيْنَٰهُ بِذِبْحٍ عَظِيمٍ ﴿١٠٧﴾

(१०७) तथा हामीले एउटा महान बलि त्यसका मुक्ति प्रदानका रुपमा दिएका थियौं ।[3]

وَتَرَكْنَا عَلَيْهِ فِى ٱلْءَاخِرِينَ ﴿١٠٨﴾

(१०८) तथा हामीले उनको शुभचर्चा पछिल्लाहरुमा शेष राख्यौं ।

سَلَٰمٌ عَلَىٰٓ إِبْرَٰهِيمَ ﴿١٠٩﴾

(१०९) इब्राहीममाथि सलाम होस् ।

كَذَٰلِكَ نَجْزِى ٱلْمُحْسِنِينَ ﴿١١٠﴾

(११०) हामी पुण्य काम गर्नेहरुलाई यसैप्रकार प्रतिफल प्रदान गर्दछौं ।

إِنَّهُۥ مِنْ عِبَادِنَا ٱلْمُؤْمِنِينَ ﴿١١١﴾

(१११) निश्चय नै त्यो हाम्रा ईमान्दार भक्तहरु मध्येको थियो ।

---

अगाडी नरहोस् जसबाट प्रेम तथा करुणाका भावका ईश्वरीय आदेशमाथि प्रभावी हुने सम्भावना नरहोस् ।

[1]हृदयका पूरा यत्नबाट पुत्र वध गर्नका लागि धर्तीमा पल्टाइदिनबाट नै तिमीले आफ्नो स्वप्न सत्य गरेर देखायौ किनकि यसबाट स्पष्ट भए कि अल्लाहका आदेशका अगाडी तिमीलाई कुनै वस्तु पनि अधिक प्रिय छैन यहाँसम्मकि एक्लो पुत्र पनि ।

[2]अर्थात् प्रिय पुत्रलाई बलि दिनुको आदेश, यो एउटा ठूलो परीक्षा थियो जसमा तिमी सफल रहयौ ।

[3]यो ठूलो कुर्वानी एउटा मेढा (भेंडा अथवा च्याङग्रा) थियो जो अल्लाहले स्वर्गबाट आदरणीय जिब्रीलद्वारा पठायो, (इब्ने कसीर) जो इस्माईलका स्थानमा ज़िब्ह (बलि) गरियो । तथा पछि यस इब्राहीमी सुन्नत (चरित्र) लाई प्रलयसम्म अल्लाहको समीपताको एउटा साधन तथा ईदुत्अज्हालाई प्रियवर कर्म बनाइयो ।

وَبَشَّرْنَٰهُ بِإِسْحَٰقَ نَبِيًّا مِّنَ ٱلصَّٰلِحِينَ ﴿١١٢﴾

(११२) तथा हामीले उसलाई इसहाक नबीको शुभ-सूचना दियौं जो सदाचारीहरुमध्ये थिए ।[1]

وَبَٰرَكْنَا عَلَيْهِ وَعَلَىٰٓ إِسْحَٰقَ ۚ وَمِن ذُرِّيَّتِهِمَا مُحْسِنٌ وَظَالِمٌ لِّنَفْسِهِۦ مُبِينٌ ﴿١١٣﴾

(११३) तथा हामीले इब्राहीम तथा इसहाकमाथि बरकतहरु (विभूतिहरु) अवतरित गर्‍यौं[2] तथा यी दुबैको सन्तानमा केही त शौभाग्यशाली छन् तथा केही आफ्ना प्राणहरुमाथि खुला अत्याचार गर्दछन् ।[3]

---

[1]आदरणीय इब्राहीमको उक्त कथाका पश्चात अब एउटा पुत्र इसहाकको तथा त्यो नबी हुनुको शुभ-सूचना दिनुबाट विदित हुन्छ कि यसभन्दा पहिला जुन पुत्रलाई बलि दिनु आदेश दिइएको थियो उनी इस्माईल थिए जो त्यस समय इब्राहीम (अलैहिस्सलाम) का एकमात्र पुत्र थिए । इसहाकको पैदाईश त्यस पश्चात भयो । भाष्यकारहरुकामध्ये यस विषयमा मतभेद छ कि ज़बीह (बलि) को हो ? इस्माईल अथवा इसहाक ? इमाम इब्ने ज़रीरले आदरणीय इसहाकलाई जबकि इब्ने कसीर तथा अधिकतर टीकाकारहरुले आदरणीय इस्माईललाई ज़बीह (बलि) मानेका छन् तथा यही कुरो सत्य हो । इमाम शौक़ानीले यसमा मौनधारण गरेका छन् । (विवरणका लागि हेर्नुस् तफ़सीर इब्ने कसीर तथा तफ़सीर फ़तहुल क़दीर)

[2]अर्थात् यी दुबैको सन्तानलाई निकै फैलायो । तथा अम्बिया (ईशदूतहरु) एवं रसूलहरु (सन्देष्टाहरु) को अधिक संख्या उनैका वंशबाट भयो । आदरणीय इसहाकका पुत्र याकूब भए जसका बाह्र पुत्रहरुबाट इस्राईलको सन्तानका बाह्र समुदाय बने तथा उनीहरुबाट इस्राईलको सन्तान बढ्यो एवं फैलियो । अधिकांश अम्बिया उनीहरुमै भए । आदरणीय इब्राहीमका अन्य ईशदूत महामान्य मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम भए ।

[3]शिर्क, (मिश्रणवाद) अवज्ञा तथा अत्याचार, उपद्रव एवं अत्याचार गरेर । इब्राहीम वंशमा बरकत (विभूति) का उपरान्त राम्रा-नराम्राको चर्चाबाट यस कुरातिर संकेत गरियो कि परिवार एवं पूर्वजहरुको सम्बन्ध अल्लाहकहाँ कुनै महत्व राख्दैन, त्यहाँ त ईमान तथा सत्कर्मको महत्व छ । यहूदी तथा इसाई यद्यपि आदरणीय इसहाकको सन्तानमध्ये हुन्, यसैप्रकार अरबका मूर्तिपूजक आदरणीय इस्माईलका सन्तानमध्ये हुन्, किन्तु उनका जो कर्तुत छन् त्यो खुला पथभ्रष्टता अथवा शिर्क एवं अवज्ञामा आधारित छ । अत: यो उच्च सम्बन्ध उनका लागि सत्कर्मको बदला (स्थापना) हुनसक्दैन ।

وَلَقَدْ مَنَنَّا عَلَىٰ مُوسَىٰ وَهَارُونَ ﴿١١٤﴾

(११४) तथा निश्चय हामीले मूसा तथा हारुनमाथि ठूलो उपकार गर्‍यौं ।[1]

وَنَجَّيْنَاهُمَا وَقَوْمَهُمَا مِنَ الْكَرْبِ الْعَظِيمِ ﴿١١٥﴾

(११५) तथा उनलाई एवं उनका समुदायलाई निकै ठूला दुख-दर्दबाट मुक्ति प्रदान गरिदियौं ।[2]

وَنَصَرْنَاهُمْ فَكَانُوا هُمُ الْغَالِبِينَ ﴿١١٦﴾

(११६) तथा उनको सहायता गर्‍यौं त तिनै प्रभावशाली (विजयी) रहे ।

وَآتَيْنَاهُمَا الْكِتَابَ الْمُسْتَبِينَ ﴿١١٧﴾

(११७) तथा हामीले उनलाई (स्पष्ट एवं) प्रकाशमय किताब प्रदान गर्‍यौं ।

وَهَدَيْنَاهُمَا الصِّرَاطَ الْمُسْتَقِيمَ ﴿١١٨﴾

(११८) तथा ती दुबैलाई सोझो मार्गमा स्थिर राख्यौं ।

وَتَرَكْنَا عَلَيْهِمَا فِي الْآخِرِينَ ﴿١١٩﴾

(११९) तथा हामीले ती दुबैका लागि पछि आउनेहरुमा यो कुरा शेष राख्यौं ।

سَلَامٌ عَلَىٰ مُوسَىٰ وَهَارُونَ ﴿١٢٠﴾

(१२०) कि मूसा तथा हारुनमाथि सलाम होस् ।

إِنَّا كَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿١٢١﴾

(१२१) निःसन्देह हामी पुण्यकार्य गर्नेहरुलाई यसैप्रकार प्रतिफल दिने गर्दछौं ।

إِنَّهُمَا مِنْ عِبَادِنَا الْمُؤْمِنِينَ ﴿١٢٢﴾

(१२२) निःसन्देह यी दुबै हाम्रा ईमान्दार भक्तहरुमध्ये थिए ।

وَإِنَّ إِلْيَاسَ لَمِنَ الْمُرْسَلِينَ ﴿١٢٣﴾

(१२३) तथा निःसन्देह इलियास पनि पैगम्बरहरु मध्येका थिए ।[3]

[1]अर्थात् उनलाई नबूअत (दूतत्व) तथा अन्य उपकारहरुबाट सम्मानित गर्‍यौं ।

[2]अर्थात् फिर्औनको दासता तथा त्यसका अत्याचार एवं क्रुरताबाट ।

[3]यिनी आदरणीय हारुनको सन्तान मध्येबाट इस्राईली नबी थिए, उनी जुन क्षेत्रमा पठाइए त्यसको नाम बअलबक थियो । केही ज्ञाताहरु भन्दछन् कि त्यस स्थानको नाम सामरह हो जो फिलस्तीनको पश्चिमी मध्यक्षेत्र हो । यहाँका मानिस बअल नाम गरेको (देवता) का पूजारी थिए । केही भन्दछन् कि यो देवीको नाम थियो ।

| | |
|---|---|
| (१२४) जबकि उनले आफ्ना क़ौमसित भने कि अल्लाहसित तर्सन्नौ ।[1] | إِذْ قَالَ لِقَوْمِهِۦٓ أَلَا تَتَّقُونَ ﴿١٢٤﴾ |
| (१२५) के तिमी 'बअ्ल' नामक मूर्तिसित प्रार्थनाहरु गर्दछौ तथा सर्वश्रेष्ठ स्रष्टालाई छाडिदिन्छौ ? | أَتَدْعُونَ بَعْلًا وَتَذَرُونَ أَحْسَنَ ٱلْخَٰلِقِينَ ﴿١٢٥﴾ |
| (१२६) अल्लाह जो तिम्रा तथा तिम्रा पूर्वका सबै पूर्वजहरुको प्रभु हो ।[2] | ٱللَّهَ رَبَّكُمْ وَرَبَّ ءَابَآئِكُمُ ٱلْأَوَّلِينَ ﴿١٢٦﴾ |
| (१२७) परन्तु समुदायले उनलाई झुठ्लाए, तसर्थ उनीहरु अवश्य (यातनाहरुमा) उपस्थित राखिने छन् ।[3] | فَكَذَّبُوهُ فَإِنَّهُمْ لَمُحْضَرُونَ ﴿١٢٧﴾ |
| (१२८) अल्लाह (तआला) का नि:स्वार्थ भक्तहरुका अतिरिक्त । | إِلَّا عِبَادَ ٱللَّهِ ٱلْمُخْلَصِينَ ﴿١٢٨﴾ |
| (१२९) तथा हामीले (इलियासको) शुभ चर्चा पछिल्ला मानिसहरुमा शेष राख्यौं । | وَتَرَكْنَا عَلَيْهِ فِى ٱلْءَاخِرِينَ ﴿١٢٩﴾ |
| (१३०) कि इलियासमाथि सलाम होस् ।[4] | سَلَٰمٌ عَلَىٰٓ إِلْ يَاسِينَ ﴿١٣٠﴾ |
| (१३१) हामी पुण्यकार्य गर्नेहरुलाई यसैप्रकार प्रतिफल दिन्छौं । | إِنَّا كَذَٰلِكَ نَجْزِى ٱلْمُحْسِنِينَ ﴿١٣١﴾ |

[1]अर्थात् यसका प्रकोप तथा पकडबाट कि त्यसलाई छाडेर तिमी अल्लाहका अन्यको उपासना गर्दछौ ।

[2]अर्थात् त्यसको उपासना गर्दछौ, त्यसका नामका भेट चढाउँछौ तथा उसलाई कार्यक्षम ठान्दछौ जो पत्थरको मूर्ति हो, तथा जो सबै वस्तुको विधाता एवं अघिल्ला-पछिल्लाको पालनहार हो, त्यसलाई तिमीले बिर्सिसकेका छौ ।

[3]अर्थात् तौहीद (एकेश्वरवाद) तथा ईमान (आस्था) बाट इन्कारका दुष्परिणाम स्वरुप नरकको दण्ड भोग्नेछौ ।

[4]इल्यासीन, इलियासकै एउटा उच्चारण हो, जस्तै तूरे सिनालाई तूरे सीनीन पनि भन्दछन् । आदरणीय इलियासलाई अरु ग्रन्थहरुमा 'इलिया' पनि भनिएको छ ।

إِنَّهُۥ مِنۡ عِبَادِنَا ٱلۡمُؤۡمِنِينَ ١٣٢

(१३२) निश्चय नै त्यो हाम्रा ईमान्दार भक्तहरु मध्येबाट थियो ।[1]

وَإِنَّ لُوطٗا لَّمِنَ ٱلۡمُرۡسَلِينَ ١٣٣

(१३३) नि:सन्देह लूत (अलैहिस्सलाम) पनि पैग़म्बरहरुमध्ये थिए ।

إِذۡ نَجَّيۡنَٰهُ وَأَهۡلَهُۥٓ أَجۡمَعِينَ ١٣٤

(१३४) हामीले उनलाई तथा उनका घरवालाहरु सबैलाई मुक्ति प्रदान गऱ्यौं ।

إِلَّا عَجُوزٗا فِي ٱلۡغَٰبِرِينَ ١٣٥

(१३५) त्यस बुढिया बाहेक जो पछि पर्नेहरुमा रहेको थियो ।[2]

ثُمَّ دَمَّرۡنَا ٱلۡأٓخَرِينَ ١٣٦

(१३६) अनि हामीले अरुहरुलाई तहस-नहस गरिदियौं ।

وَإِنَّكُمۡ لَتَمُرُّونَ عَلَيۡهِم مُّصۡبِحِينَ ١٣٧

(१३७) तथा तिमी त प्रात: भएपश्चात उनका वस्तीहरुबाट गुज्रन्छौ ।

وَبِٱلَّيۡلِۚ أَفَلَا تَعۡقِلُونَ ١٣٨

(१३८) तथा रात्रिमा पनि, के तैपनि बुझ्दैनन् ?[3]

---

[1]अन्तिम पवित्र ईशवाणी कुरआनले नबी एवं रसूलहरुको चर्चा गरेर उनका लागि अधिकतर स्थानमा यो शब्द प्रयोग गरेको छ कि त्यो हाम्रा मोमिन (ईमान भएकाहरु) भक्तहरुमध्ये थिए । जसका दुई आशय छन्, एउटा उनका चरित्र तथा कर्मको श्रेष्ठताको वर्णन प्रदर्शन जो ईमानको आवश्यक अंश हो, ताकि तिनीहरुको खण्डन हुन जाओस् जो धेरैजसो पैग़म्बरहरुका बारेमा नैतिक कमजोरीहरुलाई प्रमाणित गर्दछन् । जस्तै तौरात तथा इंजीलका वर्तमान संस्करणहरुमा अनेक पैग़म्वरहरुका विषयमा यस्ता मनगढन्त कथाहरु अंकित (दर्ज) छन् । दोस्रो उद्देश्य तिनीहरुको खण्डन हो जो कि अम्बियाहरुका बारेमा मिथ्यारोपले उनमा ईश्वरीय गुण तथा अधिकार सिद्ध गर्दछन् । अर्थात् उनी ईशदूत (पैग़म्बर) अवश्य थिए किन्तु तैपनि अल्लाहका दास थिए न कि स्वयं अल्लाह अथवा उसका अंश अथवा उसका साझेदार ।

[2]यसबाट अभिप्राय आदरणीय लूतकी पत्नी हो जो काफ़िर थिइन् । त्यो ईमानवालाहरुका साथ त्यस नगरीबाट बाहिर गएकी थिइन किनकि त्यसलाई आफ्नो जातिका साथ विनाश हुनु थियो । अत: त्यो पनि नाश भईन् ।

[3]यो मक्कावासीहरुसित सम्बोधन छ जो व्यापारिक यात्रामा यी ध्वस्त क्षेत्रहरुबाट गुज्रन्थे । यिनीसित भनिँदैछ कि तिमी प्रात: तथा रात्रिका समय पनि ती वस्तीहरुबाट गुज्रन्छौ ।

(१३९) तथा निश्चय नै यूनुस नबीहरुमध्ये थिए ।

وَإِنَّ يُونُسَ لَمِنَ الْمُرْسَلِينَ ﴿١٣٩﴾

(१४०) जब उनी भागेर पुगे भरिएको नौकामा ।

إِذْ أَبَقَ إِلَى الْفُلْكِ الْمَشْحُونِ ﴿١٤٠﴾

(१४१) अनि जब नाम निकालियो त उनी पराजित भइहाले ।

فَسَاهَمَ فَكَانَ مِنَ الْمُدْحَضِينَ ﴿١٤١﴾

(१४२) त पछि उनलाई माछाले निलिहाल्यो तथा उनी स्वयं आफूलाई धिक्कार्न लागे ।[1]

فَالْتَقَمَهُ الْحُوتُ وَهُوَ مُلِيمٌ ﴿١٤٢﴾

(१४३) त यदि उनी पवित्रतागान गर्नेहरुमध्ये नभएको भए ।

فَلَوْلَا أَنَّهُ كَانَ مِنَ الْمُسَبِّحِينَ ﴿١٤٣﴾

जहाँ अव मृतसागर छ, जो हेर्नमा अति घृणित छ एवं निकै दुर्गन्धित । के तिमी उनलाई देखेर यो कुरा वुझ्दैनौं कि रसूलहरुलाई झुठ्लाउनुको कारण उनको त्यो दुष्परिणाम भयो त तिम्रो दुराचारको परिणाम यसभन्दा भिन्न किन हुनेछ ? जव तिमी पनि त्यही काम गरिराखेका छौ जो उनीहरुले गरे त तिमी अल्लाहका प्रकोपवाट कसरी सुरक्षित रहनेछौ ?

[1]आदरणीय यूनुस नैनवा (वर्तमान मौसिल) मा नबी वनाएर पठाइएका थिए । यो आशूरिहरुको राजधानी थियो, उनीहरुले एक लाख इस्राईलीहरुलाई बन्दी वनाउन लगाएका थिए । यसकारण उनका मार्गदर्शन एवं निर्देशका लागि अल्लाह तआलाले उनीतिर आदरणीय यूनुसलाई पठायो किन्तु यो जाति उहाँमाथि ईमान स्वीकार गरेन । अन्तत: त्यस जातिलाई तर्साए कि शीघ्र नै तिमी अल्लाहका प्रकोप पकडमा आइहाल्नेछौ । प्रकोपमा विलम्व भए त अल्लाहको आज्ञाका विना स्वंय नै त्यहाँबाट निस्के तथा समुद्रतिर गई एउटा डुङ्गामा सवार भइहाले । आफ्ना नगरबाट निस्किजानुलाई यस्ता शव्दले वर्णन गरे जुनप्रकार एउटा दास आफ्नो स्वामीबाट भागेर जान्छ, किनभने उनी पनि अल्लाहको आज्ञा विना आफ्नो जातिलाई छाडेर गएका थिए । डुङ्गा सवार तथा सामानहरुले भरिएको थियो । डुङ्गा समुद्र तथा लहरहरुका मध्ये घेरियो तथा रोकियो । त्यसकारण त्यसको वोझ कम गर्नका लागि एकाध व्यक्तिलाई डुङ्गावाट समुद्रमा फ्याँक्ने प्रस्ताव अगाडी आयो ताकि डुङ्गाका सवार अन्य यात्रीहरुको प्राणको रक्षा होस् । किन्तु यसका लागि कोही तयार थिएन, यसकारण गोला-प्रथावाट निर्णय गर्नुपर्‍यो । (ऐसरुत्तफ़ासीर) । यसमा आदरणीय यूनुसको नाम आयो । उनी पराजितहरुमध्ये भए अर्थात् उनलाई आफूलाई भागेको दासका समान विवश भई समुद्रंका लहरहरुलाई समर्पित गर्नुपर्‍यो । उता अल्लाहले माछालाई आदेश दियो कि त्यसले उनलाई पूरा निलिहालोस् तथा यसप्रकार आदरणीय यूनुस अल्लाहका आदेशानुसार माछाका पेटमा गइहाले ।

لَلَبِثَ فِي بَطْنِهِۦٓ إِلَىٰ يَوْمِ يُبْعَثُونَ ١٤٤

(१४४) त मानिसहरुलाई उठाइने दिनसम्म माछाका पेटमा रहन्थे ।[1]

فَنَبَذْنَٰهُ بِٱلْعَرَآءِ وَهُوَ سَقِيمٌ ١٤٥

(१४५) त हामीले त्यसलाई समतल मैदानमा हालिदियौं तथा त्यो त्यस समय रोगी थियो ।[2]

وَأَنۢبَتْنَا عَلَيْهِ شَجَرَةً مِّن يَقْطِينٍ ١٤٦

(१४६) तथा त्यसमाथि छायाँ दिनु एउटा लहरा भएको वृक्ष हामीले उमारिदियौं ।[3]

وَأَرْسَلْنَٰهُ إِلَىٰ مِا۟ئَةِ أَلْفٍ أَوْ يَزِيدُونَ ١٤٧

(१४७) तथा हामीले उनलाई एक लाख बरु त्यसभन्दा पनि अधिक जनसमूहतिर पठायौं ।

فَـَٔامَنُوا۟ فَمَتَّعْنَٰهُمْ إِلَىٰ حِينٍ ١٤٨

(१४८) त उनीहरुले ईमान स्वीकार गरे तथा हामीले एउटा अवधिसम्म उनलाई सुख-सुविधा प्रदान गर्‍यौं ।

فَٱسْتَفْتِهِمْ أَلِرَبِّكَ ٱلْبَنَاتُ وَلَهُمُ ٱلْبَنُونَ ١٤٩

(१४९) उनीसित सोध्नुस् कि के तपाईंका प्रभुका त पुत्रीहरु छन् तथा उनका पुत्र छन् ?

أَمْ خَلَقْنَا ٱلْمَلَٰٓئِكَةَ إِنَٰثًا وَهُمْ شَٰهِدُونَ ١٥٠

(१५०) अथवा यिनीहरु त्यस समय उपस्थित थिए जब हामीले फरिश्ताहरुलाई नारी पैदा गर्‍यौं ?[4]

أَلَآ إِنَّهُم مِّنْ إِفْكِهِمْ لَيَقُولُونَ ١٥١

(१५१) सावधान रह कि यिनीहरु आफ्नो मनगढन्तरुपले भनिराखेका छन् ।

---

[1]अर्थात क्षमा-याचना तथा अल्लाहको पवित्रतागान नगरेको भए जस्तो कि उनले ﴿لَّآ إِلَٰهَ إِلَّآ أَنتَ سُبْحَٰنَكَ إِنِّي كُنتُ مِنَ ٱلظَّٰلِمِينَ﴾ (अल-अम्बिया-८७) भने, नत्र उनी केयामत (प्रलय) सम्म माछाका पेटमा नै रहन्थे ।

[2]जस्तो पैदाइसका समय शिशु अथवा जनावरको भूर्रा हुन्छ, क्षीण, निर्बल एवं अशक्त।

[3] يَقْطِين (यक़तीन) प्रत्येक त्यस लतालाई भन्दछन् जो आफ्ना तनामा उभिरहँदैन, जस्तै लौका फर्सीको लहरा । अर्थात् त्यस चटियल भूमिमा जहाँ वृक्ष थियो न भवन, एउटा छायाँदार लहरा उमारेर उनको रक्षा गर्‍यौं ।

[4]उनीबाट ईमान स्वीकार गर्नुको स्थितिको वर्णन सूरः यूनुसमा गुज्रिसकेको छ ।

[5]अर्थात् फरिश्ताहरुलाई जो यिनीलाई अल्लाहका छोरीहरु भन्छन् त के जब हामीले फरिश्ता पैदा गरेका थियौ यिनी त्यस समय त्यहाँ उपस्थित थिए र उनीहरुले फरिश्ताहरुमा नारीहरुको विशेषताको अवलोकन गरेका थिए ?

وَلَدَ اللّٰهُ ۙ وَاِنَّهُمْ لَكٰذِبُوْنَ ﴿١٥٢﴾

(१५२) कि अल्लाहका सन्तान हुन्, वस्तुतः यिनी केवल झूठा हुन् ।

اَصْطَفَى الْبَنَاتِ عَلَى الْبَنِيْنَ ﴿١٥٣﴾

(१५३) के अल्लाह (तआ़ला) ले आफ्ना लागि पुत्रीहरुलाई पुत्रमाथि प्राथमिकता दियो ?[१]

مَا لَكُمْ ۟ كَيْفَ تَحْكُمُوْنَ ﴿١٥٤﴾

(१५४) तिमीलाई के भएको छ, कस्ता आदेश लगाउँदै हिंड्छौ ?

اَفَلَا تَذَكَّرُوْنَ ﴿١٥٥﴾

(१५५) के तिमी यति पनि बुझ्दैनौ ?[२]

اَمْ لَكُمْ سُلْطٰنٌ مُّبِيْنٌ ﴿١٥٦﴾

(१५६) अथवा तिमीसित (त्यसको) कुनै स्पष्ट प्रमाण छ ?

فَاْتُوْا بِكِتٰبِكُمْ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١٥٧﴾

(१५७) त जाउ यदि साँचो हौउ भने आफ्नै किताब लिएर आउ ।[३]

وَجَعَلُوْا بَيْنَهٗ وَبَيْنَ الْجِنَّةِ نَسَبًا ۭ وَلَقَدْ عَلِمَتِ الْجِنَّةُ اِنَّهُمْ لَمُحْضَرُوْنَ ﴿١٥٨﴾

(१५८) तथा उनीहरुले त अल्लाहको तथा जिन्नातका मध्ये पनि नाता स्थापित गरेका छन्,[४] तथा जबकि जिन्नात स्वयं ज्ञान राख्दछन् कि उनी (यस आस्थाका मानिस यातनाका समक्ष) प्रस्तुत गरिनेछन् ।[५]

---

[१]जबकि यिनी स्वयं आफ्ना लागि छोरीहरु होइन छोरा मन पराउँछन् ।

[२]यदि अल्लाहको सन्तान भएको भए त नर हुन्थ्यो जसलाई तिमी पनि मन पराउँथ्यौ तथा उत्तम ठान्दछ, न कि पुत्रीहरु जो तिम्रा दृष्टिमा हीन तथा तुच्छ छन् ।

[३]अर्थात् बुद्धि त यस आस्थाको औचित्य स्वीकार गर्दैन कि अल्लाहका सन्तान छन् तथा त्यो पनि स्त्री, लौ कुनै प्रमाण कुनै ईश्वरीय धर्मग्रन्थबाटै देखाइदेउ, कुनै धर्मशास्त्र जो अल्लाहले अवतरित गरेको छ, त्यसमा अल्लाहको सन्तानको इकरार तथा सन्दर्भ होस ?

[४]यो संकेत हो मूर्तिहरुको यस आस्थातिर कि अल्लाहले जिन्नहरुका साथ विवाहका नाता स्थापित गऱ्यो जसबाट पुत्रीहरु जन्मे । यही अल्लाहका पुत्रीहरु फरिश्ता हुन् । यसप्रकार अल्लाह तआ़ला (परमेश्वर) तथा जिन्नहरुका बीच ससुराली नाता स्थापित भयो ।

[५]जबकि यो कुरा कसरी सही हुनसक्छ ? यदि यस्तो भएको भए त अल्लाहले जिन्नहरुलाई यातनामा किन पार्थे । के त्यसले आफ्ना नातेदारहरुमाथि ध्यान दिदैनथ्यो ? तथा यदि यस्तो छैन, अपितु स्वयं जिन्न पनि जान्दछन् कि उनलाई

سُبْحَٰنَ ٱللَّهِ عَمَّا يَصِفُونَ ﴿١٥٩﴾

(१५९) जे-जति यिनीहरु (अल्लाहका विषयमा) वर्णन गरिराखेका छन् त्यसबाट अल्लाह (तआ़ला) पवित्र छ ।

إِلَّا عِبَادَ ٱللَّهِ ٱلْمُخْلَصِينَ ﴿١٦٠﴾

(१६०) अल्लाह (तआ़ला) का शुद्ध भक्तहरुका अतिरिक्त ।[1]

فَإِنَّكُمْ وَمَا تَعْبُدُونَ ﴿١٦١﴾

(१६१) विश्वास गर कि तिमी सबै तथा तिम्रा (झूठा) देवता ।

مَآ أَنتُمْ عَلَيْهِ بِفَٰتِنِينَ ﴿١٦٢﴾

(१६२) कुनै एकलाई पनि बहकाउन सक्दैन ।

إِلَّا مَنْ هُوَ صَالِ ٱلْجَحِيمِ ﴿١٦٣﴾

(१६३) उनीहरु बाहेक जो नरकमा जानेवाला नै छन् ।[2]

وَمَا مِنَّآ إِلَّا لَهُۥ مَقَامٌ مَّعْلُومٌ ﴿١٦٤﴾

(१६४) (फरिश्ताहरुको कथन छ) कि हामीमध्ये प्रत्येकको स्थान नियमित छ ।[3]

وَإِنَّا لَنَحْنُ ٱلصَّآفُّونَ ﴿١٦٥﴾

(१६५) तथा हामी (अल्लाहको आज्ञापालनमा) पंक्तिबद्ध उभिएका छौं ।

وَإِنَّا لَنَحْنُ ٱلْمُسَبِّحُونَ ﴿١٦٦﴾

(१६६) तथा त्यसको तस्बीह (पवित्रताको गान) गरिराखेका छौं ।[4]

---

अल्लाहको दण्ड एवं सँजाय भोग्नका लागि अवश्य नर्कमा जानुपर्नेछ त त्यस पश्चात अल्लाह तथा जिन्नहरुका बीच नाता कुन प्रकार हुनसक्दछ ?

[1]अर्थात् यिनीहरु अल्लाहका सम्बन्धमा यस्ता कुरा जसबाट त्यो पवित्र छ यो मूर्तिपूजकहरुको व्यवहार हो । अथवा यो अभिप्राय हो कि नरक्मा जिन्न एवं मिश्रणवादी उपस्थित गरिनेछन् । अल्लाहका मुखलिस (रोजिएका) भक्तहरु होइन । उनका लागि तथा अल्लाहले स्वर्ग तयार गरेको छ । त्यस अवस्थामा यो لَمُحضَرُونَ बाट अलग गरिएको छ, तथा تسبيح (तस्बीह) अलग प्रसँग वाक्य हो ।

[2]अर्थात् तिमी तथा तिम्रा झूठा पूज्य कसैलाई विचलित गर्न समर्थ छैनन् तिनीहरुका अतिरिक्त जो अल्लाहका ज्ञानमा पहिलादेखि नै नरक्का पात्र छन् तथा यसैकारण उनी शिर्क तथा कुफ्रमा अडिग छन् ।

[3]अर्थात् अल्लाहका उपासनाका लागि यो फरिश्ताहरुको कथन हो ।

[4]अभिप्राय यो हा कि फरिश्ताहरु पनि अल्लाहको सृष्टि एवं त्यसका विशेष दास हुन् जो हरेक समय त्यसको बन्दना तथा तस्बीह एवं तक्दीस (पवित्रता ज्ञान) मा लीन रहन्छन्, न कि उनीहरु अल्लाह कि पुत्रीहरु हुन् जस्तो कि मिश्रणवादी (मुशिरकिन) भन्दछन् ।

وَإِن كَانُوا لَيَقُولُونَ ﴿١٦٧﴾

(१६७) तथा काफ़िरहरु त भन्ने गर्दथे ।

لَوْ أَنَّ عِندَنَا ذِكْرًا مِّنَ الْأَوَّلِينَ ﴿١٦٨﴾

(१६८) कि यदि हाम्रो पासमा अघिका मानिसहरुको जिक्र (स्मृति) भएको भए ।

لَكُنَّا عِبَادَ اللَّهِ الْمُخْلَصِينَ ﴿١٦٩﴾

(१६९) त हामी पनि अल्लाहका रोजिएका दासहरु हुन्थ्यौं ।[1]

فَكَفَرُوا بِهِ فَسَوْفَ يَعْلَمُونَ ﴿١٧٠﴾

(१७०) परन्तु पछि यस (कुरआन) सित कुफ्र (इन्कार) गरिहाले[2] त शीघ्र नै जानीहाल्ने छन् ।[3]

وَلَقَدْ سَبَقَتْ كَلِمَتُنَا لِعِبَادِنَا الْمُرْسَلِينَ ﴿١٧١﴾

(१७१) तथा निश्चय हाम्रो वचन पूर्वमा नै आफ्ना रसूलहरुका लागि लागू भैसकेको छ ।

إِنَّهُمْ لَهُمُ الْمَنصُورُونَ ﴿١٧٢﴾

(१७२) कि नि:सन्देह ती व्यक्तिहरु नै सहायता गरिने छन् ।

وَإِنَّ جُندَنَا لَهُمُ الْغَالِبُونَ ﴿١٧٣﴾

(१७३) तथा हाम्रो सेना प्रभावशाली (एवं श्रेष्ठतम्) रहनेछ ।[4]

فَتَوَلَّ عَنْهُمْ حَتَّىٰ حِينٍ ﴿١٧٤﴾

(१७४) अब तपाईं केही दिनसम्म यिनीबाट मुख फर्काइहाल्नुस् ।[5]

---

अल्लाह कि पुत्रीहरु हुन् जस्तो कि मिश्रणवादी (मुशरेकिन) भन्दछन् ।

[1] ذكر (स्मृति) सित अभिप्राय कुनै अल्लाहको किताब अथवा पैग़म्बर हो । अर्थात् मूर्तिपूजक पवित्र कुरआन अवतरित हुनुभन्दा पहिला भन्ने गर्थे कि हाम्रा पासमा पनि कुनै आकाशीय ग्रन्थ भएको भए जुनप्रकार अघिका मानिसहरुमाथि धर्मग्रन्थ तौरात आदि अवतरित भए । वा कुनै मार्गदर्शक अथवा सचेतक हामीलाई शिक्षा दिनेवाला भएको भए त हामी पनि अल्लाहका विशुद्ध भक्त बन्ने थियौं ।

[2] अर्थात् उनको कामना अनुसार जब अन्तिम ईशदूत मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम आए तथा पवित्र कुरआन अवतरित गरियो त त्यसमाथि ईमान स्वीकार नगरी त्यसबाट इन्कार गरे ।

[3] यो चेतावनी तथा धम्की हो कि यसलाई झुठ्लाउनुको दुष्परिणाम शीघ्र उनलाई थाहा भइहाल्नेछ ।

[4] जस्तो कि अर्को स्थानमा भन्यो : ﴿كَتَبَ اللَّهُ لَأَغْلِبَنَّ أَنَا وَرُسُلِي﴾ (अल-मुजादिल:-२१)

[5] अर्थात् उनका कुरा तथा यातनाहरुमाथि धैर्य गर्नुस् ।

وَأَبْصِرْهُمْ فَسَوْفَ يُبْصِرُونَ ﴿١٧٥﴾

(१७५) तथा उनीहरुलाई हेरिरहनुस्[1] तथा यिनी पनि अगाडी गएर देख्नेछन् ।

أَفَبِعَذَابِنَا يَسْتَعْجِلُونَ ﴿١٧٦﴾

(१७६) के यिनीहरु हाम्रा यातनाहरुको शीघ्रता गरिराखेका छन् ?

فَإِذَا نَزَلَ بِسَاحَتِهِمْ فَسَاءَ صَبَاحُ الْمُنذَرِينَ ﴿١٧٧﴾

(१७७) (सुन !) जब हाम्रो प्रकोप उनका मैदानहरुमा उतर्नेछ, त्यस समय उनको जसलाई सावधान गरिएको थियो,[2] बडो नराम्रो बिहानी हुनेछ ?

وَتَوَلَّ عَنْهُمْ حَتَّىٰ حِينٍ ﴿١٧٨﴾

(१७८) तथा तपाईं केही समयसम्म उनको ध्यान छाडिदिनुस् ।

وَأَبْصِرْ فَسَوْفَ يُبْصِرُونَ ﴿١٧٩﴾

(१७९) तथा हेरिरहनुस्, यिनीहरु पनि छिट्टै देख्नेछन् ।[3]

سُبْحَانَ رَبِّكَ رَبِّ الْعِزَّةِ عَمَّا يَصِفُونَ ﴿١٨٠﴾

(१८०) पवित्र छ तपाईंको प्रभु जो अति सम्मानवाला छ, प्रत्येक त्यस कुराबाट जो (मूर्तिपूजक) भन्ने गर्दछन् ।[4]

---

[1] कि कहिले उनीमाथि अल्लाहको प्रकोप आउनेछ ?

[2] जब मुसलमान ख़ैबर विजय गर्न गए त यहूदी उनलाई देखेर आत्तिए, जसमाथि नवी सल्लल्लाहु अलैहि वसल्लमले पनि الله اكبر अल्लाहु अकबर (अल्लाह महान छ) भनेर भन्नुभयो : خربت خيبر ، إنا إذا نزلنا بساحة قوم فساء صباح المنذرين "ख़ैबर विनष्ट भयो । हामी जब कुनै क़ौम (समूह) माथि आक्रमण गर्छौं त त्यहाँ एकाबिहानै तर्साउनेहरुबाट भयभीत हुनेहरुको अवस्था जस्तै हुन्छ ।" (सहीह बुख़ारी किताबुस्सलात, बाब मा युज़करू फ़िल फ़खिजे)

[3] यो जोड दिनका लागि दोहोऱ्याइएको छ, अथवा पहिला वाक्यसित अभिप्राय संसारको त्यो यातना (प्रकोप) छ, जो मक्कावासीहरुमाथि बद्र तथा ओहुद इत्यादि युद्धहरुमा मुसलमानहरुद्वारा काफ़िरहरुको हत्या एवं लुटपाट स्वरुप सामु आयो तथा दोस्रो वाक्यमा त्यस दण्डको चर्चा छ जसलाई यी काफ़िर तथा मुश्रिक परलोकमा भोग्नेछन् ।

[4] यसमा ती दोष तथा अवगुणहरुबाट अल्लाह तआलाको पवित्र हुने कुराको चर्चा जो बहुदेववादी अल्लाहका लागि वर्णन गर्दछन्, जस्तो उसको सन्तान अथवा कोही साक्षी छ । यो दोष दासहरुमा छ तथा सन्तान एवं साझेदारीको आवश्यकता पनि उनैलाई छ ।

وَسَلٰمٌ عَلَى الْمُرْسَلِيْنَ ﴿١٨١﴾

(१८१) पैग़म्बरहरुमाथि सलाम छ ।[1]

وَالْحَمْدُ لِلّٰهِ رَبِّ الْعٰلَمِيْنَ ﴿١٨٢﴾

(१८२) तथा सारा प्रशंसाहरु अल्लाह सर्वलोकका पालनकर्ताका लागि छन् ।[2]

سُوْرَةُ صٓ

## सूरतु साद-३८

सूर: साद मक्कामा उत्रेको, यसमा अठासी आयतहरु तथा पाँच रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुभारम्भ गर्दछु अल्लाहको नामबाट जो बडो दयालु एवं अत्यन्त कृपालु छ ।

صٓ وَالْقُرْاٰنِ ذِي الذِّكْرِ ﴿١﴾

(१) साद, यस शिक्षाप्रद कुर्आनको सौगन्ध ।[3]

بَلِ الَّذِيْنَ كَفَرُوْا فِيْ عِزَّةٍ وَّشِقَاقٍ ﴿٢﴾

(२) बरु काफ़िर अहंकारी एवं विरोधमा लागेका छन् ।[4]

---

अल्लाह यी सबै कुराहरुबाट अति महान तथा उच्च छ, किनकि त्यो निस्पृह छ, उसलाई कुनै सन्तान तथा साझेदारको आवश्यकता छैन ।

[1]कि उनीहरुले अल्लाहको सन्देश जगत्वासीहरुतिर पुऱ्याए जसका लागि निश्चय उनी सलाम तथा बधाईका पात्र छन् ।

[2]यहाँ भक्तहरुलाई सम्झाइँदै छ कि अल्लाहले तिमीमाथि उपकार गरेको छ, सन्देष्टा पठायो, धर्मशास्त्र अवतरित गऱ्यो तथा पैग़म्बरहरुले तिमीलाई अल्लाहको सन्देश सुनाए । अत: तिमी अल्लाहको कृतज्ञता व्यक्त गर । केही ज्ञाताहरु भन्छन् कि काफ़िरहरुको सत्यानाश गरी ईमानवाला तथा रसूलहरुलाई बचायो । त्यसका लागि अल्लाहका आभारी बन । حمد (हम्द) को अर्थ हो महिमाका विचारले प्रशंसा गुणगान तथा महानताको वर्णन गर्नु ।

**व्याख्या सूर: साद :**

[3]जसमा तिम्रा निम्ति प्रत्येक प्रकारको शिक्षा छ तथा यस्ता कुरा छन् जसमा लोक पनि सप्रन्छ तथा परलोक पनि । केही ज्ञाताहरुले ذي الذكر को अनुवाद प्रतिष्ठावान तथा उच्चतम् गरेका छन् । इमाम इब्ने कसीर भन्दछन् कि दुबै अर्थ सही छन्, किनकि कुर्आन प्रतिष्ठावान पनि छ तथा ईमानवालाहरुका लागि शिक्षा पनि । यस सौगन्धको उत्तर लुप्त छ कि कुरा यस्तो होइन जस्तो मक्काका नास्तिक भन्दछन् कि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम जादूगर, कवि, अथवा झूठा छन्, वरु उहाँ अल्लाहका रसूल हुन् जसमाथि यो कुर्आन अवतरित भयो ।

[4]अर्थात् यो कुर्आन त निश्चय नै शंकाबाट पवित्र तथा उनका लागि शिक्षाप्रद छ जो शिक्षा प्राप्त गर्दछन्, हो काफ़िरहरुलाई यसबाट लाभ यसकारण पुग्न सक्दैन कि उनका मस्तिष्कमा अहङ्कार तथा घमण्ड भरिएको छ

كَمْ أَهْلَكْنَا مِن قَبْلِهِم مِّن قَرْنٍ فَنَادَوا وَّلَاتَ حِينَ مَنَاصٍ ③

(३) हामीले यसभन्दा पूर्व पनि धेरै समुदायहरुलाई नाश गरिदियौं,[१] उनीहरुले धेरै प्रकारको याचना पुकार गरे परन्तु त्यो समय छुटकाराको थिएन ।[२]

وَعَجِبُوا أَن جَاءَهُم مُّنذِرٌ مِّنْهُمْ وَقَالَ الْكَافِرُونَ هَٰذَا سَاحِرٌ كَذَّابٌ ④

(४) तथा काफिरहरुलाई यस कुरामा आश्चर्य भयो कि उनीहरुमध्येबाटै एउटा सचेतक आयो[३] तथा भन्नथाले कि यो जादूगर तथा झूठा छ ।

أَجَعَلَ الْآلِهَةَ إِلَٰهًا وَاحِدًا إِنَّ هَٰذَا لَشَيْءٌ عُجَابٌ ⑤

(५) के यसले यति सारा देवताहरुलाई एउटै देवता गरिदियो, वास्तवमा यो अत्यन्त विचित्र कुरा हो ।[४]

وَانطَلَقَ الْمَلَأُ مِنْهُمْ أَنِ امْشُوا وَاصْبِرُوا عَلَىٰ آلِهَتِكُمْ إِنَّ هَٰذَا لَشَيْءٌ يُرَادُ ⑥

(६) उनका प्रमुखहरु यो भन्दै हिंडे कि जाउ आफ्ना देवताहरुमाथि दृढ रह,[५] नि:सन्देह यस कुरामा कुनै उद्देश्य (स्वार्थ) छ ।[६]

---

तथा हृदयहरुमा विरोध तथा शत्रुता । عِزَّت (इज्जत) को अर्थ हुन्छ सत्यका विरोधमा अट्टेरीपना गर्नु ।

[१]जो उनीभन्दा अधिक बलवान एवं शक्तिशाली थिए, किन्तु कुफ्र तथा झुठ्लाउनुका कारण दुष्परिणामका भोगी भए ।

[२]उनीहरुले प्रकोप देखेर सहायताका लागि पुकारे तथा क्षमा-याचनाको प्रदर्शन गरे किन्तु त्यो समय क्षमा गर्नुको थियो न पलायनको । यसकारण न उनको ईमान लाभप्रद भयो न उनी भागेर प्रकोपबाट बाँच्न सक्यो । لَاتَ शब्द لا नै हो जसमा ت (त) अधिक छ, ثُمَّ जस्तै ثَمَّةَ लाई مناص नि भन्दछन् । نَاصَ يَنُوصُ धातु हो । को जसको अर्थ भाग्नु, पछि हट्नु हो ।

[३]अर्थात् उनीजस्तै एउटा मानव-पुरुष, रसूल कसरी बन्यो ।

[४]अर्थात् एउटै अल्लाह सम्पूर्ण विश्वको व्यवस्थापक हो, जसको कोही साझेदार छैन । यसैप्रकार इबादत (बन्दना) तथा भेटको अधिकारी मात्र त्यही एक छ । यो उनका लागि विचित्र कुरा थियो ।

[५]अर्थात् आफ्ना धर्ममा अडिग रह तथा मूर्तिहरुको पूजा गरिराख, मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम को कुरालाई नसुन ।

[६]अर्थात् यो हामीलाई देवताहरुबाट अलग गरी वस्तुत: हामीलाई आफ्नो अनुयायी बनाउन तथा आफ्ना नेतृत्व एवं बढाई गराउन चाहन्छ ।

(७) हामीले त यो कुरा प्राचीन धर्महरुमा पनि सुनेनौं,[१] केही होइन, यो त केवल मनगढन्त हो ।[२]

مَا سَمِعْنَا بِهَٰذَا فِي الْمِلَّةِ الْآخِرَةِ إِنْ هَٰذَا إِلَّا اخْتِلَاقٌ ۝٧

(८) के हामी सबैमध्ये उसैमाथि (अल्लाहको) वार्ता अवतरित भएको छ ?[३] वास्तवमा यी मानिसहरु मेरो प्रकाशना (वह्य) को सम्बन्धमा सन्देहमा छन्,[४] बरु (ठीक यो हो कि) उनीहरुले मेरो यातनाको स्वाद अझै चाखेकै छैनन ।[५]

أَأُنزِلَ عَلَيْهِ الذِّكْرُ مِن بَيْنِنَا ۚ بَلْ هُمْ فِي شَكٍّ مِّن ذِكْرِي ۖ بَل لَّمَّا يَذُوقُوا عَذَابِ ۝٨

(९) अथवा के उनका पासमा तिम्रा प्रभुत्वशाली दानी प्रभुको कृपाका कोष छन्[६]

أَمْ عِندَهُمْ خَزَائِنُ رَحْمَةِ رَبِّكَ الْعَزِيزِ الْوَهَّابِ ۝٩

[१]पछिल्ला धर्महरुसित अभिप्राय या त कुरैशकै आफ्नो धर्म हो या त इसाई धर्म । अर्थात यो जुन तौहीद (एकेश्वरवाद) को आमन्त्रण दिइराखेको छ, त्यसका विषयमा त हामीले कुनै धर्ममा सुनेनौं ।

[२]अर्थात् यो तौहीद मात्र उसको आफ्नो मनगढन्त हो, अन्यथा इसाई धर्ममा पनि अल्लाहका साथ अरुहरुको उपासनामा साझी मानिएको छ ।

[३]अर्थात् मक्कामा ठूला-ठूला धनपति छन् । यदि अल्लाह कसैलाई नबी बनाउनै चाहेको भए त उनीहरु मध्येबाट बनाउँथे । यी सबैलाई छाडेर प्रकाशना (वह्य) एवं दूतत्व (रिसालत) का लागि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) को चैन पनि विचित्र छ ? यो मानौं उनीहरुले अल्लाहका निर्वाचनमा दोष निकाले । सत्य छ "खूवे बदरा बहानये बिस्यार" (दुराचारीका लागि धेरैजसो बहानाहरु छन्) । अरु स्थानमा पनि यो विषय वर्णित छ । उदाहरणार्थ सूरः अहज़ाब-३१, ३२

[४]अर्थात् उनको इन्कार यसकारण छैन कि उनलाई मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको सत्यताको ज्ञान छैन अथवा उहाँका सुबोधसित उनीहरुलाई इन्कार छ, बरु यिनी त्यस प्रकाशना (वह्य) का सन्दर्भमा नै शंका तथा शंसयसित ग्रस्त छन् जो उहाँमाथि अवतरित भयो, जसमा सबभन्दा प्रत्यक्ष तौहीद (अद्धैत) को आमन्त्रण छ।

[५]किनकि प्रकोपको स्वाद चाखेको भए त यति खुल्ला कुरोलाई झुठ्लाउँदैनथे तथा जब यस झुठ्लाउनुको वास्तविक स्वाद चाख्नेछन् त त्यो समय यस्तो हुनेछ कि फेरि नमान्ने काम आउनेछ न ईमान नै लाभदायक हुनेछ ।

[६]कि यिनी जसलाई चाहन्छन् देऊन् तथा जसलाई चाहन्छन् नदेऊन् । यिनै कोषहरुमा नबूवत (दूतत्व) पनि छ । तथा यदि यस्तो छैन, बरु प्रभुका कोषहरुका स्वामी त्यही दाता छ, त उनीहरुलाई नबूअत मोहम्मदीबाट इन्कार किन छ जसलाई परम दाता प्रभुले आफ्नो विशेष दयाबाट प्रदान गरेको छ ।

أَمْ لَهُم مُّلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا ۖ فَلْيَرْتَقُوا فِي الْأَسْبَابِ ﴿١٠﴾

(१०) अथवा के आकाश एवं धर्ती तथा उनका मध्येको प्रत्येक वस्तुको राज्य उनैको हो, तसर्थ यिनीहरु डोरीहरु तानेर चढिहालून् ।[1]

جُندٌ مَّا هُنَالِكَ مَهْزُومٌ مِّنَ الْأَحْزَابِ ﴿١١﴾

(११) यो पनि (विशाल) सेनाहरुमध्ये पराजित (सानो) सेना हो ।[2]

كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوحٍ وَعَادٌ وَفِرْعَوْنُ ذُو الْأَوْتَادِ ﴿١٢﴾

(१२) उनीहरुभन्दा पूर्व नूहका समुदाय तथा आद एवं किलाहरुवाला फिर्औन[3] ले झुठ्लाइहालेका थिए ।

وَثَمُودُ وَقَوْمُ لُوطٍ وَأَصْحَابُ لْئَيْكَةِ ۚ أُولَٰئِكَ الْأَحْزَابُ ﴿١٣﴾

(१३) तथा समूदिहरु एवं लूतका समुदायले तथा वनका दासीहरुले[4] पनि, यही (विशाल) सेनाहरु थिए ।

---

[1]अर्थात् आकाशमा चढेर त्यस प्रकाशनाको क्रम काटिदेऊन् जो मुहम्मद सल्लल्लाहु अलैहि वसल्लममाथि अवतरित हुन्छ । أسباب (अस्बाब) बहुवचन हो سبب (सबब) को यसको शाब्दिक अर्थ हो, जसद्वारा लक्ष्यसम्म पुगिन्छ चाहे त्यो कुनै पनि वस्तु होस् । यसकारण यिनका विभिन्न अर्थ गरिएका छन् । एक अनुवाद द्वार पनि गरिएको छ जसबाट फरिश्ताहरु धर्तीमा अवतरित हुन्छन् अर्थात् भऱ्याङद्वारा आकाशका द्वारसम्म पुगुन् तथा प्रकाशना (वह्य) बन्द गरिदेऊन् । (फ़तहुल कदीर)

[2] جُندٌ विधेय हो जसको विषय लुप्त छ । مَا बढाई तथा हीनतामाथि जोड दिनका लागि छ । यो अल्लाह तआ़ला (परमेश्वर) को तर्फबाट नबी सल्लल्लाहु अलैहि वसल्लमको सहायता तथा काफ़िरहरुको पराजयको वचन हो । अर्थात् काफ़िरहरुको यो सेना जो बातिल (अनृत) का सेनाहरुमध्ये एउटा सेना हो, ठूलो छ अथवा हीन, यसको कदापि चिन्ता नगर्नुस् पराजय उनको भाग्य हो । هُنَالِكَ मा टाढा स्थानतिर संकेत छ जो बद्र एवं मक्का विजयका दिनतिर पनि हुनसक्छ । जहाँ काफ़िरहरुको शिक्षाप्रद पराजय भयो ।

[3]फिरऔंनलाई खूँटहरुवाला यसकारण भनियो कि त्यो निर्दयी जब कसैमाथि क्रोधित हुन्थ्यो त उसका हात, खुट्टाहरु तथा टाउकोमा किल्ला ठोकिदिन्थ्यो, अथवा यसको उद्देश्य व्यञ्जना स्वरुप उसका बल, शक्ति एवं दृढ राज्य देखाउनु हो । अर्थात् किलहरुबाट जुनप्रकार कुनै वस्तुलाई दृढ गरिन्छ त्यसैप्रकार उसको ठूलो सेना तथा त्यसका अनुगामी पनि त्यसका राज्यशक्ति एवं दृढताका कारण थिए ।

[4] أصحاب الأيكة का सम्बन्धमा सूर: शुअरा १७६ मा अतिरिक्त जानकारी छ ।

إِن كُلٌّ إِلَّا كَذَّبَ الرُّسُلَ فَحَقَّ عِقَابِ ⑭

(१४) यिनीहरुमध्ये एउटा पनि यस्तो थिएन जसले रसूलहरुलाई झुठ्लाएन, त मेरो प्रकोप उनीमाथि सिद्ध भयो ।

وَمَا يَنظُرُ هَٰؤُلَاءِ إِلَّا صَيْحَةً وَاحِدَةً مَّا لَهَا مِن فَوَاقٍ ⑮

(१५) तथा उनीहरुलाई केवल एउटा तीब्र ध्वनिको प्रतीक्षा छ,[1] जसमा कुनै विघ्न (तथा मोहलत) छैन ।[2]

وَقَالُوا رَبَّنَا عَجِّل لَّنَا قِطَّنَا قَبْلَ يَوْمِ الْحِسَابِ ⑯

(१६) तथा (उनीहरुले) भने कि हे हाम्रा प्रभु ! हाम्रो लेखा-जोखा तिमी हामीलाई हिसाबका दिनभन्दा पूर्व नै प्रदान गरिदेउ ।[3]

اصْبِرْ عَلَىٰ مَا يَقُولُونَ وَاذْكُرْ عَبْدَنَا دَاوُودَ ذَا الْأَيْدِ ۖ إِنَّهُ أَوَّابٌ ⑰

(१७) तपाईं उनका कुराहरुमा धैर्य राख्नुस् तथा हाम्रा भक्त दाऊदलाई याद गर्नुस् जो अत्यन्त शक्तिशाली थियो,[4] निःसन्देह त्यो निकै ध्यानमग्न थियो ।

---

[1]अर्थात् नरसिंघा फुक्नुको जसबाट प्रलय व्याप्त हुनेछ ।

[2]दूध दुहुनेले एकपटक केही दूध दुहेर बच्चालाई ऊटनी अथवा गाई, भैंसीको पासमा छाडिदिन्छ ताकि उसले दूध पिउनाले थनहरुमा दूध उत्रोस् । अनि अलि बेरपछि बच्चालाई बलपूर्वक पछाडी हटाएर स्वयं दूध दुहुन आरम्भ गरिदिन्छ । यो दुईपटक दूध दुहनुकामध्ये जो अन्तर छ, यसलाई فواق (फ़वाक) भनिन्छ । अर्थात् नरसिंघा फुक्नुका पश्चात यति पनि अवसर प्राप्त हुँदैन बरु सूरः (नरसिंघा) फुक्नासाथ प्रलयको भूकम्प व्याप्त हुनेछ ।

[3] قـط (क़ित्त) को अर्थ हो, हिस्सा, अभिप्राय यहाँ कर्मपत्र अथवा लेखा-जोखा हो अर्थात् हाम्रा कर्मपत्र अनुसार हाम्रा भागमा राम्रो-नराम्रो सजा जे पनि होस् । हिसाबका दिन आउनुभन्दा पहिला हामीलाई संसारमै दिदेउ यो يَستعجلونَكَ بالعَذاب भएको कुरा नै हो । यो क्यामत (प्रलय) हुनुलाई असम्भव ठान्दै परिहास तथा उपहास स्वरुप उनीहरुले भने ।

[4]यो أيـدًا - يدٌ को बहुवचन होइन, बरु यो آدَ يَئِيدُ को धातु हो أيدٌ बल तथा दृढता । यसैबाट تائيد समर्थन दिनुको अर्थमा छ । यसबाट अभिप्राय धार्मिक बल एवं दृढता हो । जस्तो कि हदीसमा चर्चित छ कि अल्लाहको प्रिय नमाज़ दाऊदको नमाज़ तथा प्रिय रोज़े (ब्रत) दाऊदका रोज़ा हुन्, उनी आधिरात निदाउँथे अनि उठेर रात्रिको तिहाई भाग क़याम (प्रार्थना) गर्दथे तथा फेरि छैठौं भागमा निदाइहाल्थे । एकदिन रोज़ा बस्थे तथा एकदिन अन्तर गर्दथे तथा रणभूमिबाट भाग्दैनथे (सहीह बुख़ारी, किताबुल अम्बिया, तथा मुस्लिम, किताबुस सेयाम, बाबुन्नहिये अन सौमिद्दहरे)

إِنَّا سَخَّرْنَا الْجِبَالَ مَعَهُ يُسَبِّحْنَ بِالْعَشِيِّ وَالْإِشْرَاقِ ﴿١٨﴾

(१८) हामीले पर्वतहरुलाई त्यसका अधीन गरिदिएका थियौं कि त्यसका साथ सन्ध्या तथा प्रातःको महिमागान् गरून् ।

وَالطَّيْرَ مَحْشُورَةً كُلٌّ لَّهُ أَوَّابٌ ﴿١٩﴾

(१९) तथा (उडिराखेका) पंक्षीहरु पनि एकत्रित भई, सबै उसका अधीन हुन्थे ।[1]

وَشَدَدْنَا مُلْكَهُ وَآتَيْنَاهُ الْحِكْمَةَ وَفَصْلَ الْخِطَابِ ﴿٢٠﴾

(२०) तथा हामीले त्यसका राज्यलाई सुदृढ गरिदिएका थियौं[2] तथा त्यसलाई तत्वज्ञान (हिक्मत) प्रदान गरेका थियौं[3] तथा कुराको निर्णय (सुझाइदिएका थियौं) ।[4]

وَهَلْ أَتَاكَ نَبَأُ الْخَصْمِ إِذْ تَسَوَّرُوا الْمِحْرَابَ ﴿٢١﴾

(२१) तथा के तिमीलाई झगडा गर्नेहरुको सूचना प्राप्त भयो जबकि उनीहरु पर्खाल नाघेर मेहराबमा (इबादतका स्थानमा) आए ?[5]

إِذْ دَخَلُوا عَلَىٰ دَاوُودَ فَفَزِعَ مِنْهُمْ قَالُوا

(२२) जब यिनी दाऊदका पासमा पुगे त यिनी उनीसित तर्से,[6] उनीहरुले भने भयभीत नहुनुस्,

---

[1]अर्थात् मिर्मिरे बिहानीका समय तथा आखिर दिनमा पर्वत पनि दाऊदका साथ तस्बीहमा लीन हुन्थे तथा उडिराखेका पंक्षी पनि ज़बूरको पाठ सुनेर वायुमा नै एकत्र हुन्थे एवं उनका साथ तस्बीह (पवित्रतागान) गर्दथे مَحْشُورَةً (महशूरः) को अर्थ एकत्रित हो ।

[2]प्रत्येक प्रकारका भौतिक तथा आध्यात्मिक साधानहरुद्वारा ।

[3]अर्थात् नबूअत (दूतत्व), सही राये, सोझो काम ।

[4]अर्थात् विवादको निर्णय गर्नुको योग्यता, सूझबूझ, धर्मबोध एवं तर्क निकाल्नु तथा वर्णन गर्नुको शक्ति ।

[5]مِحْرَابٌ (मेहराव) सित अभिप्राय त्यो कक्ष हो जसमा सबैभन्दा अलग भई एकाग्रताका साथ अल्लाहका उपासना गर्दथे, द्वारमा द्वारपाल हुन्थे ताकि कोही भित्र गई उपासनामा वाधक नहोस् । झगडा गर्नेहरु पछाडीबाट भित्ता नाघेर भित्र आइहाले ।

[6]भयको कारण स्पष्ट छ कि एक त उनी द्वारबाट होइन पछाडीबाट पर्खालमा चढेर भित्र आए, अर्को कुरो उनीहरुले यति ठूलो कार्य गर्दाखेरि समयका राजाको कुनै भय प्रतीत गरेन । प्रत्यक्ष कारणहरुका अनुसार भय भएको वस्तुसित तर्सनु मानवको एउटा प्राकृतिक माँग हो । यो नबूअत एवं पदका विपरीत छ न तौहीदका प्रतिकूल । तौहीदका विपरीत अल्लाह बाहेक को त्यो भय हो जो अकारण हुन्छ ।

لَا تَخَفْ ۚ خَصْمٰنِ بَغٰى بَعْضُنَا عَلٰى بَعْضٍ فَاحْكُمْ بَيْنَنَا بِالْحَقِّ وَلَا تُشْطِطْ وَاهْدِنَآ اِلٰى سَوَآءِ الصِّرَاطِ ﴿٢٢﴾

हाम्रो आपसी झगडा छ, हामीले एक-अर्कामाथि अत्याचार गरेका छौं, तसर्थ तपाईं हामीबीच न्यायपूर्वक निर्णय गरिदिनुस् तथा अन्याय नगर्नुस् तथा हामीलाई सोझो मार्ग बताइदिनुस् ।[1]

اِنَّ هٰذَآ اَخِيْ ۟ لَهٗ تِسْعٌ وَّتِسْعُوْنَ نَعْجَةً وَّلِيَ نَعْجَةٌ وَّاحِدَةٌ ۟ فَقَالَ اَكْفِلْنِيْهَا وَعَزَّنِيْ فِي الْخِطَابِ ﴿٢٣﴾

(२३) (सुन्नुहोस् !) यो मेरो भाइ हो,[2] यससित ९९ भेंडाहरु छन् तथा मसित एउटा नै छ, परन्तु यसले मसित भनिराखेको छ कि आफ्नो यो एउटा पनि मलाई दिदेउ[3] तथा मसित कुरामा बडो कटु व्यवहार गर्दछ ।[4]

قَالَ لَقَدْ ظَلَمَكَ بِسُؤَالِ نَعْجَتِكَ اِلٰى نِعَاجِهٖ ۗ وَاِنَّ كَثِيْرًا مِّنَ الْخُلَطَآءِ لَيَبْغِيْ بَعْضُهُمْ عَلٰى بَعْضٍ اِلَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَقَلِيْلٌ مَّا هُمْ ۗ وَظَنَّ دَاوٗدُ اَنَّمَا فَتَنّٰهُ فَاسْتَغْفَرَ رَبَّهٗ

(२४) (उहाँले) भन्नुभयो, त्यसको आफ्ना भेंडाहरुका साथ तिम्रो एक भेंडा सम्मिलित गर्नुको प्रश्न अवश्य तिमीमाथि अत्याचार हो तथा अधिकतर भागीदार एवं साझीदार (यस्तै हुन्छन् कि) एक-अर्कामाथि अन्याय एवं अत्याचार गर्दछन् ।[5] तिनीहरुका अतिरिक्त जसले ईमान स्वीकार गरे तथा जसले पुण्यका कार्य गरे तथा

---

[1]आउनेहरुले सान्त्वना दिए कि आत्तिने आवश्यकता छैन, हाम्रो बीच एउटा झगडा छ, हामी तपाईंसित निर्णय गराउन आएका हौं । तपाईं सत्यातापूर्वक निर्णय गरिदिनुस् तथा सोझो मार्गको हामीलाई निर्देशन पनि गरिदिनुस् ।

[2]भाइसित अभिप्राय यहाँ धार्मिक भाइ अथवा व्यवसायको साझी हो या मित्र हो, सबैलाई भाइ भन्नु सही हो ।

[3]अर्थात् यो एउटा भेंडा पनि मेरा भेंडाहरुमा सामेल गरिदेउ ताकि म नै त्यसको पनि स्वामी एवं मालिक भइहालूँ ।

[4]दोस्रो अनुवाद हो, "तथा यो वार्तालापमा ममाथि प्रभावी भइहाल्यो" अर्थात् जस्तो उसका पासमा माल अधिक छ, त्यस्तै बोल्नुमा पनि मभन्दा निपुण छ, जसका कारण आफ्नो कुरा अरुलाई मान्न लगाइहाल्छ ।

[5]अर्थात् मानिसहरुमा यो दोष सामान्य छ कि एक साझेदार अर्कोमाथि ज्यादती गर्दछ तथा प्रयास गर्दछ कि अर्काको भाग पनि स्वयं हडप गरिहालोस् ।

यस्ता मानिसहरु साह्रै कम छन्,[1] तथा दाऊद (अलैहिस्सलाम) जानिहाले कि हामीले उनको परीक्षा लिएका छौं अनि त आफ्ना प्रभुसित क्षमा-याचना गर्नथाले तथा विनम्रताका साथ घोप्टिए[2] तथा (पूर्णरुपमा) ध्यानमँग्न भइहाले ।

وَخَرَّ رَاكِعًا وَّأَنَابَ ﴿٢٤﴾

(२५) त हामीले पनि उनको यो (दोष) क्षमा गरिदियौं,[3] निःसन्देह उनी हाम्रा निकट अत्यन्त उच्च पद एवं सर्वोत्तम ठिकानावाला हुन् ।

فَغَفَرْنَا لَهُ ذَٰلِكَ ۖ وَإِنَّ لَهُ عِندَنَا لَزُلْفَىٰ وَحُسْنَ مَآبٍ ﴿٢٥﴾

[1]हो, यस नैतिक दोषबाट ईमान भएकाहरु सुरक्षित रहन्छन्, किनकि उनका हृदयमा अल्लाहको भय हुन्छ तथा उनी सत्कर्ममा स्थायी हुन्छन् । अतः उनी अरुहरुमाथि तथा अरुहरुको माललाई हडप्ने प्रयत्न गर्दैनन् । परन्तु यस स्वभावका मानिसहरु कमै हुन्छन् ।

[2] وَخَرَّ رَاكِعًا को अभिप्राय यहाँ सजदामा घोप्टिनु हो ।

[3]ईशदूत दाऊदको त्यो के दोष थियो जसका लागि खेद एवं लज्जाको संवेदन गरे तथा अल्लाहले उनलाई क्षमा गरिदिए । पवित्र कुरआनमा यसको विवरण छैन, न कुनै प्रमाणित हदीसमै यस विषयको कुनै व्याख्या छ । अतः केही भाष्यकारहरुले त यहूदी कथाहरुलाई आधार बनाएर यस्ता कुरा लेखिदिएका छन् जो एउटा नबीको मर्यादाभन्दा तल छन् । केही भाष्यकारहरु जस्तै इब्ने कसीरले भने कि जब कुरआन तथा हदीस यस विषयमा मौन छ भने हामीलाई उनका विवरणका विवादमा पर्नुको आवश्यकता छैन । भाष्यकारहरुको एउटा तेस्रो समूह छ जो यस घटनाको विवरण बताउँछ ताकि कुरआनका संक्षेपको केही व्याख्या भइहालोस् । तैपनि यो एउटा कुरामा सहमत छैन । केही ज्ञाताहरु भन्छन् कि आदरणीय दाऊदले एउटा सैनिकलाई आदेश दिएका थिए कि त्यसले आफ्नी पत्नीलाई तलाक दिइदेओस्, तथा यो त्यस युगका प्रचलनमा कुनै दोषको कुरो थिएन । आदरणीय दाऊदलाई त्यसका गुणहरु तथा निपुणताको ज्ञान भएको थियो, जसका कारण उनीमा यो आकांक्षा भयो कि त्यस स्त्रीलाई त रानी हुनुपर्छ न कि एउटा साधारण नारी, ताकि उसका गुणहरु एवं निपुणताबाट पूरा देश लाभान्वित होस् । यो आकांक्षा जति पनि शुभ भावनाका आधारमा होस् किन्तु एक त अनेक पत्नीहरुको उपस्थितिमा अनुचित कुरा जस्तो लाग्छ, अर्को राजाको तर्फबाट यसलाई व्यक्त गर्नमा दबावको पक्ष पनि सम्मिलित हुनजान्छ । यसकारण आदरणीय दाऊदलाई एउटा त्यसैजस्तो घटनाद्वारा यसलाई अनुचित हुनुको आभास गराइयो तथा उनलाई वास्तवमा यसमा सचेतना आइहाल्यो । त्यही ज्ञानीहरु भन्दछन् कि यी आउनेवाला दुई व्यक्ति फरिश्ताहरु थिए जो

يَٰدَاوُۥدُ إِنَّا جَعَلْنَٰكَ خَلِيفَةً فِى ٱلْأَرْضِ فَٱحْكُم بَيْنَ ٱلنَّاسِ بِٱلْحَقِّ وَلَا تَتَّبِعِ ٱلْهَوَىٰ فَيُضِلَّكَ عَن سَبِيلِ ٱللَّهِ ۚ إِنَّ ٱلَّذِينَ يَضِلُّونَ عَن سَبِيلِ ٱللَّهِ لَهُمْ عَذَابٌ شَدِيدٌۢ بِمَا نَسُوا۟ يَوْمَ ٱلْحِسَابِ ﴿٢٦﴾

(२६) हे दाऊद ! हामीले तिमीलाई धर्तीको उत्तराधिकारी बनाइदियौं त तिमी मानिसहरुका बीच न्यायपूर्ण निर्णय गर तथा आफ्नो नामका इच्छाहरुको अनुसरण नगर अन्यथा त्यसले तिमीलाई अल्लाहको मार्गबाट हटाइदिनेछ। निःसन्देह जो मानिस अल्लाहका मार्गबाट विचलित हुन्छन् उनका लागि कठोर यातनाहरु छन् यसकारण कि उनीहरुले हिसाबका दिनलाई बिर्सिदिएका छन्।

وَمَا خَلَقْنَا ٱلسَّمَآءَ وَٱلْأَرْضَ وَمَا بَيْنَهُمَا بَٰطِلًا ۚ ذَٰلِكَ ظَنُّ ٱلَّذِينَ كَفَرُوا۟ ۚ فَوَيْلٌ لِّلَّذِينَ كَفَرُوا۟ مِنَ ٱلنَّارِ ﴿٢٧﴾

(२७) तथा हामीले आकाश एवं धर्ती तथा उनका मध्येका कुरालाई व्यर्थ (एवं अकारण) पैदा गरेका छैनौं।[1] यो शंका त नास्तिकहरुको हो, तसर्थ काफिरहरुका लागि अग्निका खराबी छ।

एउटा बनावटी विवादलाई लिएर उपस्थित भए। आदराणीय दाऊदबाट यो चूक भयो कि वादीको कुरा सुनेर नै आफ्नो विचार व्यक्त गरिदिए तथा प्रतिवादीका कुरा सुन्ने आवश्यकता ठानेनन्। अल्लाहले पदोन्नतिका लागि यस परीक्षामा उनलाई पारे। यस त्रुटिको आभास हुँदै उनी बुझिहाले कि यो अल्लाहको तर्फबाट परीक्षा थियो जो उनीमाथि आयो, तथा अल्लाहका सदनमा नतमस्तक भइहाल्यो। केही विद्वानहरु भन्छन् कि आएका फरिश्ता होइन मानिस नै थिए तथा यो काल्पनिक घटना होइन एउटा वास्तविक विवाद थियो जसका निर्णयका लागि उनी आएका थिए। यसप्रकार उनका धैर्य एवं सहनको परीक्षा लियो, किनकि यस घटनामा अप्रियता तथा स्वभाविक उत्तेजनाका कैयन् पक्ष थिए। एक त बिना अनुमति भित्ता, नाघेर गए, दोस्रो इबादतका विशेष समयमा आएर बाध्य हुनु, तेस्रो उनको कुरा गर्नुको शैली पनि उहाँको राजकीय मर्यादाभन्दा न्यून थियो (कि) अन्याय नगर्नु आदि)। किन्तु अल्लाहले दया गऱ्यो कि उहाँ उत्तेजित हुनु भएन तथा पूर्ण धैर्य एवं सहनशीलताको प्रदर्शन गर्नु हो। मनमा अप्रियताको अलि संवेदन पनि उत्पन्न भयो त्यसलाई पनि आफ्नो दोष माने। अर्थात यो अल्लाहको तर्फबाट परीक्षा थियो, यसकारण यो स्वभाविक संकोच पनि हुनु नपर्ने थियो। जसमाथि उनले तौबा एवं क्षमा-याचना गरे।

[1]बरु एक विशेष उद्देश्यका लागि पैदा गरेको छ तथा त्यो यो कि मेरा दासहरु मेरो उपासना गरून्। जो यस्तो गर्नेछ, त्यसलाई उत्तम प्रतिफल प्रदान गर्नेछु तथा जो मेरो उपासना तथा आज्ञा-पालनबाट मुख फर्काउनेछ त्यसका लागि नरकको यातना छ।

أَمْ نَجْعَلُ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ كَالْمُفْسِدِينَ فِي الْأَرْضِ أَمْ نَجْعَلُ الْمُتَّقِينَ كَالْفُجَّارِ ﴿٢٨﴾

(२८) के हामीले ती मानिसहरुलाई जसले ईमान स्वीकार गरे तथा पुण्यका कार्य गरे, तिनका समान गरिदिनेछौं जो (नित्य) धर्तीमा उपद्रव गर्दैरहे, अथवा सदाचारीहरुलाई कुकर्मीहरुजस्तो गरिदिनेछौं ?

كِتَابٌ أَنزَلْنَاهُ إِلَيْكَ مُبَارَكٌ لِّيَدَّبَّرُوا آيَاتِهِ وَلِيَتَذَكَّرَ أُولُو الْأَلْبَابِ ﴿٢٩﴾

(२९) यो मंगलमय पुस्तक हो जसलाई हामीले तपाईतिर यसकारण अवतरित गरेका छौं कि मानिसहरु यसका आयतहरुमा ध्यान देऊन तथा विचार गरून् तथा बुद्धिमान यसबाट शिक्षा ग्रहण गरून् ।

وَوَهَبْنَا لِدَاوُودَ سُلَيْمَانَ ۚ نِعْمَ الْعَبْدُ ۖ إِنَّهُ أَوَّابٌ ﴿٣٠﴾

(३०) तथा हामीले दाऊदलाई सुलैमान (नामक पुत्र) प्रदान गर्‍यौं जो अति उत्तम भक्त थियो तथा अत्याधिक ध्यान लगाउने व्यक्ति थियो ।

إِذْ عُرِضَ عَلَيْهِ بِالْعَشِيِّ الصَّافِنَاتُ الْجِيَادُ ﴿٣١﴾

(३१) जब उनका सामु सन्ध्याका समय तेज हिंड्ने घोडाहरु प्रस्तुत गरिए ।[1]

فَقَالَ إِنِّي أَحْبَبْتُ حُبَّ الْخَيْرِ عَن ذِكْرِ رَبِّي حَتَّىٰ تَوَارَتْ بِالْحِجَابِ ﴿٣٢﴾

(३२) त भन्नथाले कि मैले आफ्ना प्रभुको स्मरणमाथि यी घोडाहरुका प्रेमलाई प्राथमिकता दिएँ यहाँसम्मकि सूर्यास्त भइहाल्यो ।

رُدُّوهَا عَلَيَّ ۖ فَطَفِقَ مَسْحًا بِالسُّوقِ وَالْأَعْنَاقِ ﴿٣٣﴾

(३३) यी घोडाहरुलाई पुनः मेरा सामु ल्याउ, अनि पिडुली (कोख) तथा गर्दनहरुमाथि हातले सुम्सुम्याउन थाले ।[2]

[1] صافنات यो صافِنٌ अथवा صافِنَةٌ को बहुवचन हो अर्थात यी घोडाहरु जो तीन खुट्टामा उभिएका हुन्छन् । جياد - جَوَادٌ को बहुवचन हो जो तीव्रगामी घोडाहरुलाई भन्दछन् अर्थात् आदरणीय सुलेमानले जिहाद (धर्मयुद्ध) का लागि जुन घोडाहरु पालेका थिए ती उत्तम, कुलीन एवं वेगगामी घोडाहरु सुलेमानका पासमा निरीक्षणका लागि ल्याइए । عَشِي जोहर अथवा असदेखि दिनको अन्तसम्मका समयलाई भन्दछन् जसलाई हामी सन्ध्या भन्दछौं ।

[2] यस अनुवादका आधारमा أَحْبَبتُ यो آثرتُ (महत्व दिनु) का अर्थमा छ । عَنْ शब्द على का अर्थमा छ, तथा تَوارَتْ मा सर्वनाम सूर्यतिर फर्कन्छ जो आयतमा पहिला वर्णित छैन किन्तु वाक्य क्रम त्यसलाई बताइराखेको छ । यस व्याख्याका अनुसार आगामी आयतमा

(३४) तथा हामीले सुलेमानको परीक्षा लियौं तथा उनका सिंहासनमाथि एउटा घोडा राखिदियौं,[1] अनि उनी ध्यानमँग्न भइहाले।

وَلَقَدْ فَتَنَّا سُلَيْمَٰنَ وَأَلْقَيْنَا عَلَىٰ كُرْسِيِّهِۦ جَسَدًا ثُمَّ أَنَابَ ﴿٣٤﴾

(३५) भने कि हे मेरा प्रभु मलाई क्षमा गर तथा मलाई यस्तो राज्य प्रदान गर जो मेरा

قَالَ رَبِّ ٱغْفِرْ لِى وَهَبْ لِى مُلْكًا لَّا يَنۢبَغِى لِأَحَدٍ مِّنۢ بَعْدِىٓ ۖ

مسحًا بالسُّوق و الأعناق को अनुवाद पनि वध गर्नुहुन्छ अर्थात् مسحًا بالسَّيف (तलवार हान्नु) को अर्थ। अभिप्राय यो हुन्छ कि घोडाहरुका निरीक्षण (देख्नु) मा अस्रको नमाज़ अथवा विशेष जाप बाँकी रहयो जो त्यस समय उनी गर्दथे। यसमाथि उनलाई घोर दुख भयो तथा भन्नलागे कि म घोडाहरुको प्रेममा यति बेसुध भएँ कि सूर्यास्त भइहाल्यो तथा अल्लाहका स्मरण एवं नमाज़ अथवा जपबाट अचेत रहें। अत: क्षतिपूर्तिका लागि उनले सबै घोडाहरु अल्लाहका लागि वध गरिदिए। इमाम शौकानी तथा इब्ने कसीर आदिले यसै भाष्यलाई प्राथमिकता दिएका छन्। अन्य केही भाष्यकारहरुले यसको अर्को व्याख्या गरेका छन्, यसका आधारमा عَــن अर्थमा छ أجْلِ को। अथवा لأجْلِ ذِكْرِ رَبِّي (आफ्ना पालनकर्ताका स्मरणका कारण) मा यी घोडाहरुसित प्रेम गर्दछु अर्थात् यिनीद्वारा अल्लाहका मार्गमा ज़िहाद हुन्छ। अनि यी घोडाहरुलाई दगुराए यहाँसम्मकि जब आँखाबाट ओझेल भए, फेरि उनीहरुलाई वापस मँगाए तथा प्यार एवं प्रेमले उनको पिंडुली (कोख) तथा गर्दनहरुमाथि हातले सुम्सुम्याउन प्रारम्भ गरे। خَير (कुर्आनमा मालका अर्थमा प्रयोग भएको छ, यहाँ यो शब्द घोडाहरुका लागि आएको छ। इमाम इब्ने ज़रीर तबरीले यस दोस्रो व्याख्यालाई प्राथमिकता दिएका छन् तथा यही व्याख्या अनेक कारणहरुले सही लाग्दछ।

[1]यो परीक्षा के थियो, कुर्सीमा राखेको धड (शरीर) कुन कुरोको थियो तथा यसको अभिप्राय के हो ? यसको पनि कुनै विवरण कुर्आन तथा हदीसमा पाइँदैन। हो, केही भाष्यकारहरुले सहीह हदीसबाट सिद्ध एउटा कथासित यसलाई सम्बन्धित गरेका छन्, जुन यो हो कि आदरणीय सुलैमानले एकपटक भने कि म आज राति आफ्नी सबै पत्नीहरुसित (जसको संख्या ७० अथवा ९० थियो) सम्भोग गर्नेछु ताकि तिनीहरुबाट वीर घोड सवार पैदा होऊन् जो अल्लाहका मार्गमा धर्मयुद्ध (ज़िहाद) गरून्। तथा यसमाथि إن شاء الله (यदि अल्लाहले चाहयो) भनेनन् (अर्थात केवल आफ्नो युक्तिमाथि पूरा भरोसा गरिहाले)। परिणाम यो भयो कि एउटी अतिरिक्त कुनै पत्नी गर्भवती भएनन् तथा गर्भवती पत्नीले पनि जुन बच्चा जन्माइन्, त्यो पनि अपूर्ण अर्थात् आधा थियो। नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, यदि सुलैमान إن شاء الله भनेको भए सबै योद्धा हुने थिए (सहीह बुख़ारी, किताबुल अम्बिया, सहीह मुस्लिम, किताबुल ईमान, बाबुल इस्तिस्ना)। यी व्याख्याकारहरुका विचारमा शायद إن شاء الله नभन्नु अथवा केवल आफ्ना उपायमा निर्भर हुनु, यही परीक्षा होस् जसमा आदरणीय सुलैमान ग्रस्त भए तथा कुर्सीमाथि राखिएको बच्चा यही अपूर्ण अर्धाङ्ग शिशु होस्। والله أعلم

إِنَّكَ أَنْتَ الْوَهَّابُ ﴿٣٥﴾

अतिरिक्त कुनै (व्यक्ति) का योग्य नहोस्,[1] तिमी ठूलै दाता हौ ।

فَسَخَّرْنَا لَهُ الرِّيحَ تَجْرِي بِأَمْرِهِ رُخَاءً حَيْثُ أَصَابَ ﴿٣٦﴾

(३६) त हामीले बाबुलाई उनका वशमा गरिदियौं, त्यो उहाँका आदेशले जहाँ उहाँ चाहनुहुन्थ्यो कोमलतापूर्वक पुऱ्याइदिने गर्थ्यो ।[2]

وَالشَّيَاطِينَ كُلَّ بَنَّاءٍ وَغَوَّاصٍ ﴿٣٧﴾

(३७) तथा (शक्तिशाली) जिन्नातलाई पनि (उनका अधीन गरिदियौं) तथा प्रत्येक भवन बनाउनेलाई एवं डुबुल्की लगाउनेलाई ।

وَآخَرِينَ مُقَرَّنِينَ فِي الْأَصْفَادِ ﴿٣٨﴾

(३८) तथा अन्य (जिन्नात) लाई पनि जो जंजीरहरुमा जकडिएका हुन्थे ।[3]

هَٰذَا عَطَاؤُنَا فَامْنُنْ أَوْ أَمْسِكْ بِغَيْرِ حِسَابٍ ﴿٣٩﴾

(३९) यो हो हाम्रो वरदान अब तिमी उपकार गर अथवा रोकिइराख कुनै हिसाब छैन ।[4]

وَإِنَّ لَهُ عِنْدَنَا لَزُلْفَىٰ وَحُسْنَ مَآبٍ ﴿٤٠﴾

(४०) तथा उनका लागि हाम्रा पासमा बडो निकटता छ तथा धेरै राम्रो ठेगाना छ ।[5]

---

[1]अर्थात् घोडासवारहरुको सेना पैदा हुनुको कामना तिम्रा उपाय एवं चाहतले पूरा भएन, किन्तु मलाई यस्तो अधिकारसहित राज्य प्रदान गरिदेउ कि त्यस्तो राज्य मेरो अतिरिक्त कसैसित नहोस्, त्यस पश्चात सन्तानको आवश्यकता नै रहने छैन, यो दुआ पनि अल्लाहका धर्मका प्रभुत्वकै लागि थियो ।

[2]अर्थात् हामीले सुलैमानको यो प्रार्थना सुन्यौं तथा यस्ता राज्य प्रदान गऱ्यौं कि वायु उनका अधीन थियो । यहाँ वायुको कोमलता (कम गति) सित चलेको भन्यो, जबकि सूरः अम्बिया आयत संख्या ८१ मा त्यसलाई तीब्र भनियो । यसको अभिप्राय यो हो कि वायुको स्वभाविक गति तीब्र छ किन्तु सुलैमानका लागि त्यसलाई सुस्त गतिको गरियो अथवा आवश्यकता अनुसारको कहिले तेज हुन्थ्यो कहिले कम जस्तो सुलेमान चाहन्थे । (फ़तहुल क़दीर)

[3]जिन्नहरुमा जो उद्दण्ड तथा काफ़िर हुन्थे उनलाई सिक्रिहरुमा जकडिन्थ्यो ताकि उनीहरु आफ्ना उद्दण्डता तथा कुफ़्रताका कारण अवज्ञा गर्न नसकून् ।

[4]अर्थात् तिम्रो विनय अनुसार हामीले तिमीलाई महान राज्य प्रदान गरिदियौं । अब मानिसहरुमध्ये जसलाई चाहन्छौ देउ, जसलाई चाहँदैनौं नदेउ, तिमीसित हामीले हिसाब पनि लिने छैनौं ।

[5]अर्थात् सांसारिक मान-मर्यादा प्रदान गर्नुका उपरान्त परलोकमा पनि आदरणीय सुलैमानलाई विशेष निकटता प्राप्त हुनेछ ।

(४१) तथा हाम्रा भक्त अय्यूबको (पनि) चर्चा गर जबकि उसले आफ्ना प्रभुलाई पुकाऱ्यो कि मलाई शैतानले कष्ट एवं दुख पुऱ्याएको छ ।[1]

وَاذْكُرْ عَبْدَنَآ أَيُّوبَ إِذْ نَادَىٰ رَبَّهُۥٓ أَنِّى مَسَّنِىَ ٱلشَّيْطَٰنُ بِنُصْبٍ وَعَذَابٍ ﴿٤١﴾

(४२) आफ्नो खुट्टाले हान, यो स्नानको शीतल एवं पिउने पानी हो ।[2]

ٱرْكُضْ بِرِجْلِكَ ۖ هَٰذَا مُغْتَسَلٌۢ بَارِدٌ وَشَرَابٌ ﴿٤٢﴾

(४३) तथा हामीले उसलाई त्यसको पुरा परिवार प्रदान गऱ्यौं बरु त्यतिकै अरु पनि त्यसका साथ आफ्नो विशेष कृपाले[3] तथा बुद्धिमानीहरुको शिक्षाका लागि[4]

وَوَهَبْنَا لَهُۥٓ أَهْلَهُۥ وَمِثْلَهُم مَّعَهُمْ رَحْمَةً مِّنَّا وَذِكْرَىٰ لِأُو۟لِى ٱلْأَلْبَٰبِ ﴿٤٣﴾

[1]आदरणीय अय्यूब (अलैहिस्सलाम) को रोग तथा त्यसमा उनको धैर्य विख्यात छ, जसका अनुसार अल्लाह तआलाले परिवार तथा मालको विनाश गऱ्यो एवं रोगद्वारा उनको परीक्षा लियो जसमा उनी कैयन वर्ष ग्रस्त रहे, यहाँसम्मकि मात्र एउटी पत्नी साथमा शेष रही जो प्रातः एवं सन्ध्या उनको सेवा पनि गर्दथी तथा कतै कामकाज गरी आवश्यकता जति उनको जीविका (आहार) को प्रबन्ध पनि गर्दथी । यहाँ अनेक व्याख्याहरुको वर्णन पाइन्छ किन्तु यसमा के-कति सही छ तथा कति छैन, त्यसलाई जान्नका लागि कुनै विश्वस्त सूत्र छैन । نُصْب सित शारीरिक दुख तथा عذاب सित आर्थिक परीक्षा अभिप्राय छ । यसलाई शैतानसित सम्बन्धित गऱ्यो जबकि सबै कुरा गर्नेवाला अल्लाह नै छ, किनकि सम्भव छ कि शैतानका शंसय नै कुनै यस्ता कर्मको कारण बनेका होऊन्, जसपश्चात यो परीक्षा आयो अथवा आदर स्वरुप भलाईलाई अल्लाहतिर तथा नराम्रोलाई शैतानसित सम्बन्धित गरिन्छ ।

[2]अल्लाह तआलाले अय्यूबको प्रार्थना स्वीकार गऱ्यो तथा उनीसित भन्यो कि भूमिमा खुट्टा हान, जसबाट एउटा जलस्रोत प्रवाहित भयो । यसको जल पिउनाले आन्तरिक रोग तथा स्नान गर्नाले वाह्य रोग समाप्त हुनजाओस् । केही ज्ञाताहरु भन्छन् कि दुई जलस्रोत थिए, एउटाबाट स्नान गरे तथा दोस्रोबाट जल पिए । किन्तु कुर्आनको शब्दबाट प्रथम कथनको समर्थन हुन्छ अर्थात् एउटै जलस्रोत थियो ।

[3]केही विद्वानहरु भन्छन् कि पहिला परिवार जो परीक्षाका स्वरुप नष्ट गरिएको थियो, त्यसलाई जीवित गरियो र त्यसका समतुल्य एवं अधिक परिवार प्रदान गरियो । तर यी कुरा कुनै प्रमाणित सुत्रहरुबाट साबित छैन । धेरै सही कुरो यो लाग्दछ अल्लाह महानले पहिलाभन्दा अधिक सम्पत्ति एवं सन्तानबाट उनलाई पुरस्कृत गऱ्यो । यो पहिलाभन्दा दुईगुना थियो ।

[4]अर्थात् हामीले अय्यूबलाई यो सबै कुरा फेरिबाट दियौं तथा आफ्नो विशेष दयाको प्रदर्शन गर्नुका अतिरिक्त यसको दोस्रो उद्देश्य यो थियो कि बुद्धिमान मानिस यसबाट शिक्षा प्राप्त गरून् तथा उनीहरु पनि परीक्षा

وَخُذۡ بِيَدِكَ ضِغۡثٗا فَٱضۡرِب بِّهِۦ وَلَا تَحۡنَثۡۗ إِنَّا وَجَدۡنَٰهُ صَابِرٗاۚ نِّعۡمَ ٱلۡعَبۡدُ إِنَّهُۥٓ أَوَّابٞ ﴿٤٤﴾

(४४) तथा आफ्नो हातमा सिन्काहरुको एउटा कूचो लिएर हान तथा सौगन्ध भङ्ग नगर,[1] सत्य त यो हो कि हामीले उसलाई अत्यन्त धैर्यवान भक्त पायौं, त्यो अत्यन्त सदाचारी भक्त थियो, तथा अत्यन्तै ध्यान दिनेवाला।

وَٱذۡكُرۡ عِبَٰدَنَآ إِبۡرَٰهِيمَ وَإِسۡحَٰقَ وَيَعۡقُوبَ أُوْلِي ٱلۡأَيۡدِي وَٱلۡأَبۡصَٰرِ ﴿٤٥﴾

(४५) तथा हाम्रा भक्तहरु इब्राहीम, इसहाक एवं याकूबको पनि (मानिसहरुसित) वर्णन गर जो हात एवं आँखाहरु भएका थिए।[2]

إِنَّآ أَخۡلَصۡنَٰهُم بِخَالِصَةٖ ذِكۡرَى ٱلدَّارِ ﴿٤٦﴾

(४६) हामीले उनीहरुलाई एउटा विशेष कुरो अर्थात् आखिरतका स्मरणका साथ विशेषरुपले सम्बन्धित गरेका थियौं।[3]

एवं दुखहरुमा यसैप्रकार धैर्यधारण गरे, जुनप्रकार अय्यूब (अलैहिस्सलाम) ले गरे।

[1]रोगका दिनहरुमा सेविका पत्नीबाट कुनै कुरा खिन्न भएर आदरणीय अय्यूबले उसलाई सय कोर्रा हान्नुको कसम खाइहालेका थिए। स्वस्थ हुनुका पश्चात अल्लाह तआला (परमेश्वर) ले भन्यो कि सय सिन्काका झाडुले एक पटक त्यसलाई हानिदेउ, तिम्रो कसम पूरा भइहाल्नेछ। यस विषयमा धर्मज्ञानीहरुको मतभेद छ कि यो सुविधा मात्र अय्यूबका लागि विशेष छ अथवा कुनै अन्य व्यक्ति पनि यसैप्रकार सय कोर्राको सट्टा सय सिन्काको झाडु हानेर कसम भङ्ग गर्नबाट बच्नसक्छ ? केही ज्ञाताहरु प्रथम मतलाई मान्दछन् तथा केही भन्दछन् कि यदि कडा अथवा कुटाई गर्नुको प्रतिज्ञा गरेको छैन भने त यसप्रकार गर्न सकिन्छ। (फ़तहुल क़दीर) एक हदीसबाट ज्ञात हुन्छ कि नवी सल्लल्लाहु अलैहि वसल्लमले पनि एउटा लाचार निर्वल, व्यभिचारीलाई सय कोर्राहरुको सट्टा सय सिन्काहरुको झाडु हानेर दण्ड दिनु हो। (मुसनद अहमद-५/२२२, इब्ने माज़ा, बावुल क़वीर वल मरीज यजिबु अलैहिल हद्द, यसलाई अलवानीले सही भनेका छन्) जसबाट विशेष अवस्थामा यसको औचित्य सिद्ध हुन्छ।

[2]अर्थात् अल्लाहको बन्दना एवं धर्मका समर्थनमा ठूला बलवान् एवं धर्म तथा ज्ञानवोधमा प्रमुख थिए। केही ज्ञाताहरु भन्दछन् कि यो |ایدی ، نِعَمٌ का अर्थमा छ, अर्थात् यो ती मानिसहरु जसमाथि अल्लाहको विशेष अनुग्रह तथा उपकार भयो अथवा यिनीहरु मानिसहरुमाथि उपकार गर्नेहरु थिए।

[3]अर्थात् हामीले उनलाई आखिरतको स्मरणका लागि रोजेका थियौं, अर्थात् आखिरत हरसमय उनका ध्यानमा रहन्थ्यो जो अल्लाहको एक विशाल कृपा तथा संयम एवं सदाचारको आधार हो।

وَإِنَّهُمْ عِندَنَا لَمِنَ الْمُصْطَفَيْنَ الْأَخْيَارِ ﴿٤٧﴾

(४७) तथा यी सबै हाम्रा निकट रोजिएका सर्वोत्तम मानिसहरुमध्ये थिए ।

وَاذْكُرْ إِسْمَاعِيلَ وَالْيَسَعَ وَذَا الْكِفْلِ ۖ وَكُلٌّ مِّنَ الْأَخْيَارِ ﴿٤٨﴾

(४८) तथा इस्माईल, यसअ एवं जुलकिफ़्लको पनि वर्णन गर्नुस्, यी सबै श्रेष्ठतम मानिसहरु थिए ।[1]

هَٰذَا ذِكْرٌ ۚ وَإِنَّ لِلْمُتَّقِينَ لَحُسْنَ مَآبٍ ﴿٤٩﴾

(४९) यो शिक्षा हो, तथा विश्वास गर कि सदाचारीहरुका लागि सर्वोत्तम स्थान छ ।

جَنَّاتِ عَدْنٍ مُّفَتَّحَةً لَّهُمُ الْأَبْوَابُ ﴿٥٠﴾

(५०) अर्थात् स्थाई स्वर्ग जसका द्वार उनका लागि खुलेका छन् ।

مُتَّكِئِينَ فِيهَا يَدْعُونَ فِيهَا بِفَاكِهَةٍ كَثِيرَةٍ وَشَرَابٍ ﴿٥١﴾

(५१) जसमा (शान्तिसँग) तकिया लगाएर बसेर थरी-थरीका फल तथा विभिन्न प्रकार का पेय पदार्थको माँग गरिराखेका छन् ।

۞ وَعِندَهُمْ قَاصِرَاتُ الطَّرْفِ أَتْرَابٌ ﴿٥٢﴾

(५२) तथा उनका छेउ तल दृष्टि पारेका समान आयु भएका हूरहरु हुनेछन् ।[2]

هَٰذَا مَا تُوعَدُونَ لِيَوْمِ الْحِسَابِ ﴿٥٣﴾

(५३) यो हो जसको वचन तिमीसित हिसाबका दिनका लागि गरिन्थ्यो ।

إِنَّ هَٰذَا لَرِزْقُنَا مَا لَهُ مِن نَّفَادٍ ﴿٥٤﴾

(५४) निश्चय नै यी जीविकाहरु हाम्रा (विशेष) उपहार हुन् जसका कहिल्यै अन्त्य छैन ।[3]

[1]यसअ आदरणीय इलियासका जानशीन (उत्तराधिकारी) थिए । ال व्यक्तिवाचक हो तथा यो अजमी नाम हो अरबी होइन । (जुलकिफ़्लका लागि सूरः अम्बिया आयत नम्बर ८५ को भाष्य हेर्नुस् । أخيار यो خَيِّرٌ خَيْرٌ को बहुवचन हो । जस्तै مَيِّتٌ को बहुवचन أموات हो ।

[2]अर्थात् जसका दृष्टिहरु आफ्ना पतिभन्दा अगाडी जाने छैनन् । أتراب यो تِرْبٌ को बहुवचन हो । समायु अथवा निरन्तर शोभा एवं सौन्दर्यले सुशोभित फ़तहुल क़दीर)

[3] رزق (जीविका) को अर्थ वरदान हो, तथा هذا (यो) बाट प्रत्येक प्रकारका उपरोक्त अनुकम्पाहरु तथा ती मान-सम्मान अभिप्राय हुन् जसबाट स्वर्गवासी आनन्दित हुनेछन् । نفاد को अर्थ अन्त्य तथा अवरोध हो । यी अनुकम्पाहरु पनि अनन्त तथा आदर सम्मान पनि स्थाई ।

| | |
|---|---|
| (५५) यो त भयो प्रतिफल,[1] (याद राख कि) उद्दण्डहरुका लागि अत्यन्त नराम्रो स्थान छ ।[2] | هَٰذَا ۚ وَإِنَّ لِلطَّٰغِينَ لَشَرَّ مَـَٔابٍ ﴿٥٥﴾ |
| (५६) नरक हो जसमा उनी जानेछन्, (ओह !) कस्तो नराम्रो ओछ्यान छ । | جَهَنَّمَ يَصْلَوْنَهَا فَبِئْسَ ٱلْمِهَادُ ﴿٥٦﴾ |
| (५७) यो छ, त त्यसलाई चाखून्, गरम पानी तथा पीप ।[3] | هَٰذَا فَلْيَذُوقُوهُ حَمِيمٌ وَغَسَّاقٌ ﴿٥٧﴾ |
| (५८) तथा केही अन्य प्रकारका विभिन्न यातनाहरु ।[4] | وَءَاخَرُ مِن شَكْلِهِۦٓ أَزْوَٰجٌ ﴿٥٨﴾ |
| (५९) यो एउटा समुदाय हो, जो तिमीसँग (अग्निमा) जानेछ,[5] उनका लागि कुनै | هَٰذَا فَوْجٌ مُّقْتَحِمٌ مَّعَكُمْ |

[1] هـــذا (यो) लुप्त विषयको विधेय हो, अर्थात् الأمرهذا अथवा هذا को विधेय लुप्त छ अर्थात् هــــذا كما ذُكِــر अर्थात् उपरोक्त सत्कारिहरुको मामिला हो । यसका पश्चात दूराचारीहरुका दुष्परिणामको चर्चा गरिदैछ ।

[2] طَـــاغِين जसले अल्लाहका आदेशहरुको अवहेलना गरे तथा रसूलहरुलाई झुठ्लाए । يَصْلَون को अर्थ हो يَدْخُلون अर्थात् प्रवेश गर्नेछन् ।

[3] حَمِيمٌ و غَسّاقٌ यो هذا (यो) विधेय हो, अर्थात هذا حَمِيمٌ و غَسّاقٌ فَلْيذُو قوه यो हो गरम पानी तथा पीप त यसलाई चाख । حَمِيمٌ गरम उम्लिराखेको जल जो उनका आन्द्राहरुलाई काटिदिनेछ, غَسّـــاقٌ नरकवासीहरुका छालाबाट जो पीप तथा घृणित रगत निस्कने छ, अथवा अति शीतल जसको पानी अत्यन्त कठिन हुनेछ ।

[4] شكله उस जस्तै, أزواجٌ भिन्न प्रकारका अर्थात حميم و غساق का सदृश्य अरु पनि कैयन् प्रकारका यातनाहरु हुनेछन् ।

[5] नरकका द्वारहरुमा उभेका फरिश्ताहरु कुफ्रका प्रमुखहरु वा कुमारका प्रधानहरुसित भन्नेछन् जब अनुयायी प्रकारका मानिस नरकमा जानेछन्, अथवा कुफ्र एवं पथभ्रष्टताका प्रमुख परस्पर यो कुरा अनुयायीहरुतिर संकेत गरी भन्नेछन् ।

لَا مَرْحَبًا بِهِمْ ۚ إِنَّهُمْ صَالُوا النَّارِ ﴿٥٩﴾

स्वागत छैन ।[1] यिनी त नरकमा जानेहरु हुन् ।[2]

قَالُوا بَلْ أَنتُمْ لَا مَرْحَبًا بِكُمْ ۖ أَنتُمْ قَدَّمْتُمُوهُ لَنَا ۖ فَبِئْسَ الْقَرَارُ ﴿٦٠﴾

(६०) (उनीहरु) भन्नेछन् कि बरु तिमी नै हौ जसका लागि कुनै स्वागत छैन, तिमीले नै त त्यसलाई पहिलादेखि नै हाम्रा समक्ष ल्याइराखेका थियौ,[3] त रहनुको निकै नराम्रो स्थान छ ।

قَالُوا رَبَّنَا مَن قَدَّمَ لَنَا هَٰذَا فَزِدْهُ عَذَابًا ضِعْفًا فِي النَّارِ ﴿٦١﴾

(६१) (उनीहरु) भन्नेछन् कि हे हाम्रा प्रभु जसले त्यसलाई (कुफ्रको रीति) हाम्रा लागि सर्वप्रथम निकालेको होस् ।[4] त्यसका पक्षमा नरकको दुईगुना दण्ड गरिदेउ ।[5]

وَقَالُوا مَا لَنَا لَا نَرَىٰ رِجَالًا كُنَّا نَعُدُّهُم مِّنَ الْأَشْرَارِ ﴿٦٢﴾

(६२) तथा (नरकवासीहरु) भन्नेछन् कि के कुरो छ कि उनीहरु हामीलाई देखिंदैनन् जसको गणना हामी नराम्रा मानिसहरुमा गर्दथ्यौं ।[6]

[1]यी अगुवा नरकमा जाने काफिरहरुका लागि फरिश्ताहरुका उत्तरमा परस्पर भन्नेछन् । رَحْبَة को अर्थ विस्तार एवं फैलाव हो । مَرْحَبًا यो स्वागतको शब्द हो जो आगन्तुकका लागि अभिनन्दनका समय भनिन्छन् । لا مَرْحَبًا यसका विपरीत हो ।

[2]यो उनीबाट स्वागत नगर्नुको कारण हो । अर्थात उनका तथा हाम्रा बीच अन्तरको कुनै कारण छैन । यिनी पनि हामीजस्तै नरकमा प्रवेश गरिराखेका छन्, जुनप्रकार हामी दण्डका पात्र बनेका छौं यिनी पनि नरकको यातनाका अधिकारी भएका छन् ।

[3]अर्थात् तिमी नै कुफ्र तथा पथ-भ्रष्टताका मार्ग हाम्रा अगाडी सुशोभित गरी प्रस्तुत गर्दथ्यो, हुन त तिमी नै त नरकको यातनाका अनुगामी हौ, यो अनुगामी आफ्नो प्रमुखहरुलाई भन्नेछन् ।

[4]अर्थात् जसले हामीलाई कुफ्रको आमन्त्रण दिए तथा त्यसलाई सत्य तथा सही भने अथवा जसले हामीलाई कुफ्रतिर बोलाएर यो दण्ड हाम्रा लागि अगाडी पठाए ।

[5]यो त्यही कुरो हो जसलाई अन्य कैयन् स्थानमा वर्णन गरिएको छ, जस्तै सूर: अल-आराफ-३८, अल-अहज़ा-६८ मा ।

[6] أَشْرَار (दुष्टहरु) बाट अभिप्राय दरिद्र मुसलमान हुन्, जस्तै अम्मार, खब्बाब, सुहैब, बिलाल, सलमान رضي الله عنهم इत्यादि । उनीहरुलाई मक्काका प्रमुख दुष्टताले 'नराम्रा मानिस' भन्दथे ।

(६३) के हामीले नै उनलाई उपहास बनाएका थियौं[1] अथवा हाम्रा आँखा उनीबाट अर्कैतिर गएका छन् ।[2]

أَتَّخَذْنَٰهُمْ سِخْرِيًّا أَمْ زَاغَتْ عَنْهُمُ ٱلْأَبْصَٰرُ ﴿٦٣﴾

(६४) विश्वास गर कि नरकवासीहरुको यो झगडा अवश्य नै हुनेछ ।[3]

إِنَّ ذَٰلِكَ لَحَقٌّ تَخَاصُمُ أَهْلِ ٱلنَّارِ ﴿٦٤﴾

(६५) भनिदिनुस् कि म नै केवल सचेतक हूँ[4] तथा एक अल्लाह प्रभावशालीका अतिरिक्त अन्य कोही इबादत (उपासना) का योग्य छैनन् ।

قُلْ إِنَّمَآ أَنَا۠ مُنذِرٌ ۖ وَمَا مِنْ إِلَٰهٍ إِلَّا ٱللَّهُ ٱلْوَٰحِدُ ٱلْقَهَّارُ ﴿٦٥﴾

(६६) जो प्रभु हो आकाशहरुको तथा धर्तीको तथा जे-जति उनका मध्य छ, त्यो प्रभुत्वशाली (महान्) एवं बडो क्षमा गर्नेवाला छ ।

رَبُّ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ وَمَا بَيْنَهُمَا ٱلْعَزِيزُ ٱلْغَفَّٰرُ ﴿٦٦﴾

(६७) तपाईं भनिदिनुस् कि यो निकै ठूलो सूचना हो ।[5]

قُلْ هُوَ نَبَؤٌا۟ عَظِيمٌ ﴿٦٧﴾

(६८) जसबाट तिमी मुख फर्काइराखेका छौ ।

أَنتُمْ عَنْهُ مُعْرِضُونَ ﴿٦٨﴾

---

अहिले पनि दुराचारी सत्यवादी एवं सदाचारीहरुलाई कट्टरपन्थी, आतङ्कवादी एवं उग्रवादी जस्ता उपनाम दिन्छन् ।

[1]अर्थात् जगत्मा जहाँ हामी त्रुटिमा थियौं ।

[2]अथवा उनीहरु पनि हाम्रा साथमा यहीं कतै छन्, हाम्रा आँखाले उनलाई देख्न सकिरहेको छैन ?

[3]अर्थात् आपसमा यिनका तकरार र एक-अर्काको कटु आलोचना गर्न एउटा यस्तो सत्य छ जसमा विवाद हुनेछैन ।

[4]अर्थात् तिमी जुन अनमान गर्दछौ, त्यो म होइन बरु तिमीलाई यातना तथा प्रकोपबाट सावधान गर्नेवाला हूँ ।

[5]अर्थात् म परलोकको जुन यातनाबाट सावधान गरिराखेको छु तथा तौहीद (एकेश्वरवाद) को निमन्त्रणा दिइराखेको छु यो ठूलो सूचना हो । यसबाट विमुखता तथा निश्चिन्तता नगर बरु यसमाथि ध्यान दिनु गम्भीरताले सोच्नुको आवश्यकता छ ।

مَا كَانَ لِيَ مِنْ عِلْمٍ بِالْمَلَإِ الْأَعْلَىٰ إِذْ يَخْتَصِمُونَ ﴿٦٩﴾

(६९) मलाई ती उच्च पद भएका फरिश्ताहरु (को वार्तालाप) को अलिकति पनि ज्ञान नै छैन जबकि उनी वाद-विवाद गरिराखेका थिए ।[1]

إِنْ يُوحَىٰ إِلَيَّ إِلَّا أَنَّمَا أَنَا نَذِيرٌ مُبِينٌ ﴿٧٠﴾

(७०) मतिर मात्र यही प्रकाशना गरिन्छ कि म त स्पष्टरुपले सावधान गरिदिने हूँ ।[2]

إِذْ قَالَ رَبُّكَ لِلْمَلَائِكَةِ إِنِّي خَالِقٌ بَشَرًا مِنْ طِينٍ ﴿٧١﴾

(७१) जबकि तपाईंको प्रभुले फरिश्ताहरुसित भने[3] कि म माटोबाट मनुष्यलाई बनाउनेवाला हूँ ।[4]

فَإِذَا سَوَّيْتُهُ وَنَفَخْتُ فِيهِ مِنْ رُوحِي

(७२) त जब म त्यसलाई ठीक-ठाक गरिहालूँ[5] तथा त्यसमा आफ्नो आत्मा फूँकिदिऊ ।[6] त तिमी सबै

[1] ملأ أعلى सित अभिप्राय फरिश्ताहरु हुन्, अर्थात् उनी कुन कुरामाथि वाद-विवाद गरिराखेका छन् म जान्दिन ? सम्भव छ यस वाद-विवादसित अभिप्राय त्यो वार्तालाप छ, जुन आदमका सृजनाका समय भयो जस्तो कि अगाडी यसको चर्चा गरिँदैछ ।

[2] अर्थात् मेरो दायित्व यही हो कि म त्यो अनिवार्य एवं उचित कर्म तिमीलाई बताइदिऊ जसलाई अपनाउनाले तिमी अल्लाहका प्रकोपबाट बाँचिहाल्नेछौ, तथा ती अवैध एवं पापको कर्महरुको स्पष्टीकरण गरिदिऊ जसबाट बचेर तिमी अल्लाहको प्रसन्नता अन्यथा उसका क्रोध एवं प्रकोपका पात्र बन्नेछौ । यही त्यो चेतावनी हो जसको प्रकाशना (वह्य) म तिर गरिन्छ ।

[3] यो कथा यसभन्दा पूर्व सूरः बकरः, सूरः आराफ, सूरः हिज्र, सूरः बनी इस्राईल तथा सूरः कहफमा वर्णित भइसकेको छ । अब यहाँ पनि संक्षिप्तमा वर्णित गरिँदैछ ।

[4] अर्थात् एक शरीर मानव-जातिबाट बनाउन गइराखेको छु । मनुष्यलाई بَشَر (वशर) त्यसका धर्तीसित संलग्न हुनुको कारण भन्यो । अर्थात् धर्तीबाट नै त्यस सबको सम्बन्ध छ, तथा त्यो सबै यसै त्यसको शरीर अथवा मुख स्पष्ट छ ।

[5] अर्थात् त्यसलाई मानवीय रुपमा ढालिहालून् तथा त्यसका सबै अङ्ग सही एवं बराबर गरिहालून् ।

[6] अर्थात् त्यो आत्मा जसको म स्वामी हूँ, मेरा अतिरिक्त यसको कोही अधिकार राख्दैन तथा जसलाई फूँक्नासाथ यो माटोको पुत्ला जीवन गति एवं शक्तिले युक्त भइहाल्नेछ ।

فَقَعُوا لَهُ سٰجِدِينَ ﴿٧٢﴾

उसका समक्ष ढोकिहाल्नु ।[1]

فَسَجَدَ الْمَلٰٓئِكَةُ كُلُّهُمْ أَجْمَعُونَ ﴿٧٣﴾

(७३) त सबै फरिश्ताहरुले सजदा (ढोग) गरे ।[2]

إِلَّآ إِبْلِيسَ اسْتَكْبَرَ وَكَانَ مِنَ الْكٰفِرِينَ ﴿٧٤﴾

(७४) परन्तु इब्लीसले (गरेन) उसले अहंकार गऱ्यो[3] तथा त्यो थियो नै काफ़िरहरुमध्ये ।[4]

قَالَ يٰٓإِبْلِيسُ مَا مَنَعَكَ أَن تَسْجُدَ لِمَا خَلَقْتُ بِيَدَيَّ أَسْتَكْبَرْتَ

(७५) (अल्लाह तआ़लाले) भन्यो कि हे इब्लीस तिमीलाई त्यसलाई सजदा गर्नबाट कुन कुरोले रोक्यो जसलाई मैले आफ्ना हातहरुले

मानव जातिको श्रेष्ठता एवं प्रतिष्ठाका लागि यही धेरै छ कि उसमा त्यो आत्मा फुकिएको छ जसलाई अल्लाहले आफ्नो आत्मा भनेको छ ।

[1]यो सजदा (नत्मस्तक हुने) धन्यवाद अथवा सम्मानको सजदा हो उपासनाको सजदा होइन । यो सम्मानको सजदा अघि उचित थियो । यसैकारण अल्लाहले आदमका लागि फरिश्ताहरुलाई यसको आदेश दियो । अब इस्लाममा सम्मानको सजदा पनि कसैका लागि उचित छैन । हदीसमा वर्णित छ, नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "यदि यो वैध भएको भए म आफ्नी पत्नीलाई आदेश दिन्थें कि आफ्नो पतिलाई ढोकोस् ।" (मिश्कात, किताबुन्निकाह, बाबु इशतिन्निसाए ससंदर्भ तिर्मिजी, अलबानीले भने कि आफ्ना साक्षीहरुका कारण यो हदीस सही छ) ।

[2]यो मनुष्यको दोस्रो प्रतिष्ठा हो कि उसलाई फरिश्ताहरुबाट सज्दा गरायो, अर्थात् फरिश्ताहरु जस्तो पवित्र सृष्टिले उसलाई सम्मान स्वरुप सजदा गऱ्यो । كلهم बाट विदित हुन्छ कि एउटा पनि फरिश्ता सजदा गर्नमा पछि रहेनन् । यसका पश्चात أجمعون भनेर यो स्पष्ट गरियो कि सजदा पनि सबैले एकैसाथ गरे, विभिन्न समयमा होइन । केही ज्ञानीहरु भन्दछन् कि यो जोडमाथि जोड सामान्यतामा अतिश्योक्तिका लागि हो ।

[3]यदि इबलीसलाई फरिश्ताहरुका गुणले युक्त मानिन्छ भने यो अनिबन्ध निरन्तर हुनेछ, अर्थात् इबलीस सजदाका यस आदेशमा सम्मिलित हुनेछ, अन्य स्थितिमा यो अनिबन्ध विच्छेदका लागि हुनेछ अर्थात् त्यो यस आदेशमा सम्मिलित थिएन । किन्तु आकाशमा रहनुका कारण उसलाई पनि आदेश दिइयो परन्तु उसले घमण्डका कारण नकारिदियो ।

[4] كان अर्थमा छ صار को, अर्थात् अल्लाहका आदेश तथा त्यसको आज्ञा-पालनबाट अहङ्कार गर्नुका कारण त्यो काफ़िर भयो अथवा अल्लाहका ज्ञानमा त्यो काफ़िर थियो ।

أَمْ كُنتَ مِنَ الْعَالِينَ ﴿٧٥﴾

बनाएँ ।[1] के तिमी केही अहंकारमा आइहालेका छौ अथवा तिमी उच्च पदवालाहरुमध्ये हौ ?

قَالَ أَنَا خَيْرٌ مِّنْهُ ۖ خَلَقْتَنِي مِن نَّارٍ وَخَلَقْتَهُ مِن طِينٍ ﴿٧٦﴾

(७६) (उसले) उत्तर दियो कि म यसभन्दा श्रेष्ठ छु, तिमीले मलाई अग्निले बनायौ तथा यसलाई माटोले बनाएका छौ ।[2]

قَالَ فَاخْرُجْ مِنْهَا فَإِنَّكَ رَجِيمٌ ﴿٧٧﴾

(७७) भन्यो कि त यहाँबाट निस्किहाल, तँ तिरस्कृत भइस् ।

وَإِنَّ عَلَيْكَ لَعْنَتِي إِلَىٰ يَوْمِ الدِّينِ ﴿٧٨﴾

(७८) तथा तँमाथि केयामतका दिनसम्म मेरो धिक्कार एवं तिरस्कार छ ।

قَالَ رَبِّ فَأَنظِرْنِي إِلَىٰ يَوْمِ يُبْعَثُونَ ﴿٧٩﴾

(७९) भन्नलाग्यो कि हे मेरा प्रभु ! मलाई मानिसहरु उठी उभिने दिनसम्म अवसर प्रदान गर ।

قَالَ فَإِنَّكَ مِنَ الْمُنظَرِينَ ﴿٨٠﴾

(८०) (अल्लाह तआलाले) भन्यो कि तँ अवसर प्राप्त गर्नेहरुमध्ये छस् ।

إِلَىٰ يَوْمِ الْوَقْتِ الْمَعْلُومِ ﴿٨١﴾

(८१) निर्धारित समयका दिनसम्म ।

قَالَ فَبِعِزَّتِكَ لَأُغْوِيَنَّهُمْ أَجْمَعِينَ ﴿٨٢﴾

(८२) भन्नलाग्यो, अनि त तिम्रो महिमाको सौगन्ध ! म यी सबैलाई अवश्य विचलित गर्नेछु ।

[1]यो पनि मानिसको प्रतिष्ठा तथा बडाई व्यक्त गर्नकै लागि भन्यौ अन्यथा प्रत्येक वस्तुको विधाता अल्लाह नै हो ।

[2]अर्थात् शैतानले आफ्ना भ्रममा यो ठान्यो कि आगोको तत्व माटोको तत्वभन्दा उत्तम छ । हाँलाकि यो सबै तत्व समजातीय अथवा समीपवर्ती छन्, यिनीमध्ये कसैलाई अर्कोमाथि प्रधानता कुनै अस्थाई (वाह्य कारण) बाट नै प्राप्त हुन्छ तथा यो कारण आगोका सापेक्ष माटोका भागमा आएको छ, कि अल्लाहले त्यसैबाट आदमलाई आफ्ना हातहरुले बनायो, अनि त्यसमा आफ्नो आत्मा फुक्यो, यसकारण माटोलाई नै आगोको अपेक्षा प्रतिष्ठा एवं प्रधानता प्राप्त छ । यसका अतिरिक्त आगोको काम जलाएर खरानी पारिदिनु हो जबकि माटो त्यसका विपरीत अनेक प्रकारको उपजको उद्गम हो ।

إِلَّا عِبَادَكَ مِنْهُمُ الْمُخْلَصِينَ ﴿٨٣﴾

(८३) तिम्रा ती भक्तहरुका अतिरिक्त जो रोजिएका [एवं प्रिय (शुद्ध)] होऊन् ।

قَالَ فَالْحَقُّ وَالْحَقَّ أَقُولُ ﴿٨٤﴾

(८४) भन्यो कि सत्य त यो हो, तथा म सत्य नै भन्ने गर्दछु ।

لَأَمْلَأَنَّ جَهَنَّمَ مِنْكَ وَمِمَّنْ تَبِعَكَ مِنْهُمْ أَجْمَعِينَ ﴿٨٥﴾

(८५) कि तिमीबाट तथा तिम्रा सबै अनुगामीबाट म (पनि) नरकलाई भरिदिनेछु ।

قُلْ مَا أَسْأَلُكُمْ عَلَيْهِ مِنْ أَجْرٍ وَمَا أَنَا مِنَ الْمُتَكَلِّفِينَ ﴿٨٦﴾

(८६) भनिदिनुस् कि म यसमा तिमीबाट कुनै बदला (पारिश्रमिक माँग्दिन[1] तथा न म बनावटी कुरा गर्नेहरुमध्ये हूँ ।[2]

[1]अर्थात् यस आमन्त्रण तथा उपदेशबाट मेरो उद्देश्य मात्र अल्लाहको आज्ञाको पालना हो, संसार आर्जन होइन ।

[2]अर्थात् आफ्नो तर्फबाट रचेर अल्लाहसित यस्तो कुरो सम्वन्धित गरिदेऊन् जो उसले नभनेको होस् अथवा म तिमीलाई यस्तो कुराको आमन्त्रण दिऊ जसको आदेश अल्लाहले मलाई नदिएको होस्, वरु केही घटी-बढी गरिए विना म अल्लाहको आदेश तिमीसम्म पुऱ्याइराखेको छु । नवीका सहचर अब्दुल्लाह इब्ने मसऊद भन्दथे कि जसलाई कुनै कुराको ज्ञान नहोस्, त्यसका विषयमा भनिदिनुपर्छ कि الله أعلم (अल्लाहु आलम्) "अल्लाह अत्याधिक जान्नुहुन्छ ।" यो भन्नु पनि ज्ञान नै हो, यसकारण कि अल्लाहले आफ्ना पैग़म्वरसित भन्यो, भनिदिनुस् وما أنا من المتكلفين "म आडम्वर गर्नेहरुमध्ये होइन ।" (इब्ने कसीर) । यसका अतिरिक्त यसबाट साधारण जीवन व्यवहारमा पनि आडम्वर तथा देखावटीपनाबाट वच्नुको आदेश विदित हुन्छ । जस्तै नवी सल्लल्लाहु अलैहि वसल्लमले نُهينا عن التكلف भन्नुभयो (सहीह वुख़ारी नम्बर ७२९३) "हामीलाई आडम्वरबाट रोकिएको छ ।" आदरणीय सलमान भन्नुहुन्छ نهانا رسول الله صلى الله عليه وسلم أن نتكلف للضيف (सहीहुल जामेईस्सग़ीर लिल अलबानी ९८७१) "हामीलाई रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले अतिथिका लागि आडम्वर गर्नबाट रोकिदिनु हो ।" यसैबाट विदित भयो कि वस्त्र, आवास तथा अन्य विषयहरुमा बनावटीपना जो वर्तमान युगमा जीवनस्तर उपासनाका नाममा धनवानहरुको आचरण तथा तरीका बनिसकेको छ, इस्लामी शिक्षाहरुका प्रतिकूल छ । इस्लाममा सादगी तथा साधारणता अपनाउनुको शिक्षाको प्रोत्साहन छ ।

إِنْ هُوَ إِلَّا ذِكْرٌ لِّلْعَالَمِينَ ﴿٨٧﴾

(८७) यो त सबै जगत्वालाहरुका लागि सर्वथा शिक्षाप्रद एवं सदुपदेश हो ।[1]

وَلَتَعْلَمُنَّ نَبَأَهُ بَعْدَ حِينٍ ﴿٨٨﴾

(८८) वस्तुत: तिमी यसको वास्तविकतालाई केही समय पश्चात नै (सही ढङ्गले) जानिहाल्नेछौ ।[2]

سُورَةُ الزُّمَرِ

## सूरतुज़्ज़ुमर-३९

सूर: ज़ुमर* मक्कामा अवतरित भएको तथा यसमा पचहत्तर आयतहरु एवं आठ रुकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाह तआलाको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु एवं अत्यन्त दयालु छ ।

تَنزِيلُ الْكِتَابِ مِنَ اللَّهِ الْعَزِيزِ الْحَكِيمِ ﴿١﴾

(१) यस किताबको अवतरण अल्लाह (तआला) प्रभावशाली एवं हिक्मतवालाको तर्फबाट हो ।

إِنَّا أَنزَلْنَا إِلَيْكَ الْكِتَابَ بِالْحَقِّ

(२) नि:सन्देह हामीले यस किताबलाई सत्यताका साथ तपाईंतिर अवतरित गरेका छौं[3] तसर्थ

---

[1]अर्थात् यो कुर्आन अथवा प्रकाशना (वह्य) अथवा त्यो आमन्त्रण जो म प्रस्तुत गरिराखेको छु, सर्वजगत्का मानिस तथा जिन्नहरुका लागि सदुपदेश हो, प्रतिबन्ध यो छ कि कोही यसबाट शिक्षा ग्रहण गर्न प्रयत्न गरोस् ।

[2]अर्थात् कुर्आनले जुन कुराहरुलाई वर्णन गरेको छ, जो वादा (वाचाहरु) तथा चेतावनी दिएको छ, तिनका यथार्थ तथा सत्यता शीघ्र नै तिम्रा सामु आउनेछ । जस्तो कि यसको सत्यता बद्रका दिन सामु आयो, मक्का विजयका दिन आयो अथवा मौतका समय त सबैका सामु स्पष्ट आइहाल्छ ।

* ***व्याख्या सूर: अज़्ज़ुमर*** : हदीसमा वर्णित छ कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम हरेक राति सूर: बनी इस्राईल तथा सूर: जुमरको पाठ गर्नुहुन्थ्यो (सहीह तिर्मिजीमा यसलाई अल्बानीले सहीह भनेका छन्) ।

[3]अर्थात् यसमा तौहीद (अद्वैत) एवं रिसालत (दूतत्व), मआद (पुनर्जीवन) तथा आदेश एवं अनिवार्य कर्तव्यहरुलाई जो साबित गरिएको छ, त्यो सबै सत्य छ तथा यिनैलाई मान्नु तथा पालन गर्नुमा मानवको मुक्ति छ ।

فَاعْبُدِ اللّٰهَ مُخْلِصًا لَّهُ الدِّيْنَ ۝

तपाईं केवल अल्लाहकै इबादत गर्नुहोस् उसैका लागि धर्मलाई शुद्ध गर्दै ।[1]

اَلَا لِلّٰهِ الدِّيْنُ الْخَالِصُ ۗ وَالَّذِيْنَ اتَّخَذُوْا مِنْ دُوْنِهٖٓ اَوْلِيَآءَ ۘ مَا نَعْبُدُهُمْ اِلَّا لِيُقَرِّبُوْنَآ اِلَى اللّٰهِ زُلْفٰى ۗ اِنَّ اللّٰهَ يَحْكُمُ بَيْنَهُمْ فِيْ مَا هُمْ فِيْهِ يَخْتَلِفُوْنَ ۗ اِنَّ اللّٰهَ لَا يَهْدِيْ

(३) सावधान ! अल्लाह (तआ़ला) कै लागि विशुद्ध इबादत गर्नु छ,[2] तथा जसले उसका अतिरिक्त संरक्षक बनाएका छन् (तथा भन्दछन्) कि हामी यिनका इबादत मात्र यसकारण गर्दछौं कि यी (महात्मा) अल्लाहका समीप हामीलाई पुऱ्याइदेऊन्,[3] यिनीहरु जुन

[1]दीन دين को अर्थ यहाँ इबादत (आराधना) तथा आज्ञापालन हो तथा إخلاص को अभिप्राय मात्र अल्लाहको प्रसन्नताका लागि पुण्यको कर्म गर्नु हो । आयत नीयत (संकल्प) को अनिवार्यता तथा त्यसको शुद्धताका लागि प्रमाण हो । हदीसमा पनि संकल्पको विशुद्धताको महत्व यो भनेर स्पष्ट गरिएको छ कि «إِنَّمَا الأَعْمَالُ بِالنِّيَّاتِ» "कर्महरुको निर्भरता इरादाहरुमाथि छ" अर्थात् जुन राम्रो कर्म अल्लाहको प्रसन्नताका लागि गरिन्छ । (प्रतिबन्ध यो छ कि त्यो सुन्नतका अनुकूल होस्) त्यो स्वीकार्य हुनेछ तथा जुन कर्ममा कुनै अन्य भावनाका मिलावट हुनेछ, त्यो अस्वीकार्य हुनेछ ।

[2]यहाँ त्यसै इबादतको शुद्धतामाथि जोड दिइएको छ जसको आदेश यसभन्दा पूर्वको आयतमा छ कि इबादत तथा अनुपालन एकमात्र अल्लाहकै अधिकार हो, न उसको उपासनामा कसैलाई साझेदार बनाउनु वैध (जायेज़) छ, न अनुपालनकै त्यसका अतिरिक्त कोही अधिकारी छैन । हो, रसूल सल्लल्लाहु अलैहि वसल्लमका अनुपालनलाई स्वयं अल्लाहले नै आफ्नो अनुपालन भनेको छ, अत: रसूल सल्लल्लाहु अलैहि वसल्लमको आज्ञापालन अल्लाहकै आज्ञापालन हो कुनै अन्यको होइन । तैपनि इबादतमा यो कुरो पनि छैन । अत: इबादत अल्लाहका अतिरिक्त कुनै ठूलाभन्दा ठूला रसूलको पनि वैध छैन त कहाँ साधारण व्यक्तिहरुको, जसलाई मानिसहरुलाई मनोमानी अल्लाहकै अधिकारहरुको मालिक बनाएका छन् । ﴿مَّآ اَنْزَلَ اللّٰهُ بِهَا مِنْ سُلْطٰنٍ﴾ "अल्लाहको तर्फबाट यसमाथि कुनै तर्क छैन ।"

[3]यसबाट स्पष्ट छ कि मक्काका मूर्तिपूजक अल्लाहलाई नै विधाता, जीविका प्रदान गर्ने तथा विश्वको सञ्चालक मान्दथे, अनि अरुहरुको इबादत किन गर्दथे ? यसको उत्तर उनी यो दिन्थे जुन कुरआ़नले यहाँ (उद्धृत) गरेको छ कि सम्भवत: उनीद्वारा हामीलाई अल्लाहको सामीप्य प्राप्त होस् अथवा अल्लाहका निकट हाम्रो अभिस्तावना गरिदेओस्, जस्तै अर्को स्थानमा भन्यो :

مَنْ هُوَ كٰذِبٌ كَفَّارٌ ③

विषयमा मतभेद गरिराखेका छन् त्यसको (न्यायपूर्ण) निर्णय अल्लाह (तआला) स्वयं गरिदिनेछ ।[1] झूठा तथा कृतघ्न मानिसहरु(लाई) अल्लाह (तआला) मार्ग देखाउँदैन ।[2]

لَوْ أَرَادَ اللّٰهُ أَنْ يَتَّخِذَ وَلَدًا لَّاصْطَفٰى مِمَّا يَخْلُقُ مَا يَشَاءُ ۙ سُبْحٰنَهٗ ۖ هُوَ اللّٰهُ الْوَاحِدُ الْقَهَّارُ ④

(४) यदि अल्लाह (तआला) को विचार सन्तानकै भएको भए त आफ्नो सृष्टिमध्ये जसले चाहन्थ्यो रोजिहाल्थ्यो (परन्तु) त्यो त पवित्र छ[3] त्यो त्यही अल्लाह हो एक तथा सर्वशक्तिमान ।

خَلَقَ السَّمٰوٰتِ وَالْأَرْضَ بِالْحَقِّ ۚ يُكَوِّرُ الَّيْلَ عَلَى النَّهَارِ وَيُكَوِّرُ

(५) अत्यन्त उत्तमरुपले उसले आकाशहरु तथा धर्तीलाई बनायो, त्यो रातलाई दिनमा तथा दिनलाई रातमा बेरिदिन्छ ।[4] तथा

﴿ هٰٓؤُلَآءِ شُفَعَآؤُنَا عِنْدَ اللّٰهِ ﴾

"अर्थात् यी अल्लाहका निकट हाम्रा अभिस्तावक (सिफारिश गर्ने) हुन् ।"(यूनुस-१८)

[1]किनकि संसारमा कोही यो मान्न तयार छैन कि त्यो शिर्क गरिराखेको छ अथवा त्यो सत्यमा छैन । क़यामत (प्रलय) का दिन अल्लाहले नै निर्णय गर्नेछ तथा त्यसका अनुसार प्रतिकार अथवा दण्ड दिनेछ ।

[2]त्यो झूठ नै हो कि यी मिथ्या पूज्यहरुद्वारा यिनको पहुँच अल्लाहसम्म हुनेछ अथवा यिनीहरु उनको सिफारिश गर्नेछ । तथा अल्लाहलाई छोडेर विवश मानिसहरुलाई पूज्य ठान्नु पनि निकै ठूलो कृतघ्नता हो, यस्ता झूठा तथा कृतघ्नहरुलाई मार्गदर्शन कसरी प्राप्त हुनसक्छ ।

[3]अनि उसका सन्तान केटीहरु नै किन हुन्थे जस्तो कि मूर्तिपूजकहरुको आस्था थियो ? बरु त्यसले आफ्नो सृष्टिहरुमध्ये जसलाई चाहन्थ्यो त्यो त्यसको सन्तान हुन्थ्यो न कि त्यो जसको यिनी विश्वास गराउँछन्, किन्तु त्यो त यस दोषबाट नै पवित्र छ । (इब्ने कसीर)

[4]تَكْوِير (तक्वीर) को अर्थ हो, एउटा कुरोलाई अर्को कुरामा बेर्नु, रातलाई दिनमा बेर्नुको अर्थ हो, रातले दिनलाई छोप्नु, यहाँसम्मकि त्यसको प्रकाश समाप्त भइहालोस् तथा दिनलाई रातमा बेर्नुको अभिप्राय दिनले रातिलाई छोप्नु हो, यहाँसम्मकि त्यसको अन्धकार समाप्त हुनजाओस् ।

النَّهَارَ عَلَى الَّيْلِ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ ۖ كُلٌّ يَجْرِي لِأَجَلٍ مُّسَمًّى ۗ أَلَا هُوَ الْعَزِيزُ الْغَفَّارُ ۝

उसले सूर्य तथा चन्द्रमालाई कार्यमा लगाएको छ । प्रत्येक एउटा निर्धारित अवधिसम्म हिंडिराखेको छ, विश्वास गर कि त्यही शक्तिशाली एवं पापहरुलाई क्षमा गर्नेवाला हो ।

خَلَقَكُم مِّن نَّفْسٍ وَاحِدَةٍ ثُمَّ جَعَلَ مِنْهَا زَوْجَهَا وَأَنزَلَ لَكُم مِّنَ الْأَنْعَامِ ثَمَانِيَةَ أَزْوَاجٍ ۚ يَخْلُقُكُمْ فِي بُطُونِ أُمَّهَاتِكُمْ خَلْقًا مِّن بَعْدِ خَلْقٍ فِي ظُلُمَاتٍ ثَلَاثٍ ۚ

(६) उसले तिमी सबैलाई एउटै प्राणबाट पैदा गर्‍यो,[१] अनि त्यसैबाट त्यसको जोडी पैदा गर्‍यो[२] तथा तिम्रो लागि पशुहरुमध्ये आठ जोडी (भाले-पोथी) उतार्‍यो ।[३] त्यो तिमीलाई तिम्रा माताहरुका गर्भमा एक रुपका पश्चात अर्को रुपमा ।[४] तीन-तीन अँध्यारामा,[५] यही

---

यो त्यही अभिप्राय हो जो يُغْشِي الَّيْلَ النهار (अल-आराफ़-५४) को छ ।

[१]अर्थात् आदरणीय आदमबाट जसलाई अल्लाहले आफ्ना हातले बनाएको थियो तथा आफ्नो तर्फबाट त्यसमा आत्मा फुकेको थियो ।

[२]अर्थात् आदरणीय हव्वालाई आदमको बायाँ करङबाट सृष्टि गर्‍यो । यो पनि उसको पूर्ण सामर्थ्य हो किनकि हऊवाका अतिरिक्त कुनै नारीको जन्म कुनै मानवको करङबाट भएन । यसप्रकार यो पैदाईश स्वभाविक रीतिका विपरीत तथा अल्लाहका सामर्थ्यका लक्षणहरु मध्येका छ ।

[३]यो त्यही चार प्रकारका पशुहरुको वर्णन हो, भेंडा, बाखा, ऊट, गाई जो भाले-पोथी गरी आठ हुनजान्छन्, जसका चर्चा सूरः अनआम आयत-१४३ तथा १४४ मा गुज्रिसकेको छ । أنــزل यो خَلَقَ का अर्थमा छ । अथवा एक वर्णनका अनुसार अल्लाहले यिनलाई सर्वप्रथम स्वर्गमा पैदा गर्‍यो अनि उनलाई उतार्‍यो । अत: यो إنزال वास्तविक हुनेछ । अथवा أنزل (उतार्‍यो) यसकारण भनियो कि पशु चारा विना रहन सक्दैनन् तथा चारा (खानेकुरो) को उब्जनीका लागि पानी अनिवार्य छ, जो कि आकाशबाट वर्षाद्वारा उतार्छ ।

[४]अर्थात् माताका गर्भाशयमा विभिन्न रुपहरुबाट गुज्रन्छ । पछिल्ला वीर्य, अनि जमेको रक्त, अनि मासुको टुक्रा, अनि हाडहरुको ढाँचा जसमाथि मासुको वस्त्र यी सबै रुपहरुबाट गुजार्नुका पश्चात पूर्ण मानव तयार हुन्छ ।

[५]एउटा आमाको पेटको अँध्यारो, दोस्रो गर्भाशयको अँध्यारो तथा तेस्रो त्यस झिल्ली अथवा पर्दाको अँध्यारो जसमा बच्चा बेरिएको हुन्छ ।

ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ لَهُ الْمُلْكُ ۖ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ فَاَنّٰى تُصْرَفُوْنَ ⑥

अल्लाह (तआ़ला) तिम्रो प्रभु हो । त्यसैका लागि राज्य छ, त्यसका अतिरिक्त कोही उपास्य छैन, अनि तिमी कहाँ भौंतारिंदैछौ ?[1]

اِنْ تَكْفُرُوْا فَاِنَّ اللّٰهَ غَنِيٌّ عَنْكُمْ ۗ وَلَا يَرْضٰى لِعِبَادِهِ الْكُفْرَ ۚ وَاِنْ تَشْكُرُوْا يَرْضَهُ لَكُمْ ۗ وَلَا تَزِرُ وَازِرَةٌ وِّزْرَ اُخْرٰى ۗ ثُمَّ اِلٰى رَبِّكُمْ مَّرْجِعُكُمْ فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ۗ اِنَّهُ عَلِيْمٌ بِذَاتِ الصُّدُوْرِ ⑦

(७) यदि तिमी कृतघ्नता व्यक्त गर्छौ भने (याद राख कि) अल्लाह (तआ़ला) तिमी (सबैबाट) निस्पृह छ ।[2] तथा त्यो आफ्ना दासहरुको कृतघ्नताबाट प्रसन्न छैन तथा यदि तिमी कृतज्ञता व्यक्त गर्दछौ भने उसले त्यसलाई तिम्रा लागि रुचाउने छ[3] र कोही कसैको बोझ उठाउँदैन, अनि तिमी सबैलाई आफ्नो प्रभुतिर फर्कनु छ। तिमीलाई त्यसले भनिदिनेछ जो तिमी गर्दथ्यौ, निश्चय त्यो हृदयसम्मका कुराहरुसित अवगत छ ।

وَاِذَا مَسَّ الْاِنْسَانَ ضُرٌّ دَعَا رَبَّهُ مُنِيْبًا اِلَيْهِ ثُمَّ اِذَا خَوَّلَهُ نِعْمَةً مِّنْهُ نَسِيَ مَا كَانَ يَدْعُوْٓا اِلَيْهِ مِنْ قَبْلُ وَجَعَلَ لِلّٰهِ

(८) तथा जब मनुष्यलाई जतिखेर दुख पुग्दछ त त्यो निकै ध्यानमँग्न भएर आफ्ना प्रभुलाई पुकार्दछ अनि जब अल्लाह (तआ़ला) आफ्नो पासबाट सुख प्रदान गरिदिन्छ त त्यो त्यसभन्दा पूर्व जुन प्रार्थना गर्दथ्यो त्यसलाई

[1]अथवा किन तिमी सत्यवाट असत्यतिर तथा संमार्गबाट कुमार्गतिर फर्किराखेका छौ ?

[2]यसको व्याख्याका लागि हेर्नुस् सूरः इब्राहीम आयत-८ को टिप्पणी ।

[3]अर्थात् कुफ्र यद्यपि मानिस अल्लाहकै इच्छाले गर्दछ । किनकि उसले नचाहिकन केही हुँदैन न हुन नै सक्छ, तैपनि अल्लाह तआ़ला कुफ्रलाई रुचाउँदैन त्यसको प्रसन्नता प्राप्त गर्नुको मार्ग त कृतज्ञता हो न कि कृतघ्नता । अर्थात त्यसको चाहत अर्कै कुरा हो, तथा उसको प्रसन्नता अर्कै कुरा हो, जस्तो कि पहिला पनि यस बिन्दुको व्याख्या केही स्थानहरुमा गरिसकिएको छ । हेर्नुस् सूरः बकरःको आयत संख्या २१५ को व्याख्या ।

أَنْدَادًا لِّيُضِلَّ عَن سَبِيلِهِۦۚ قُلْ تَمَتَّعْ بِكُفْرِكَ قَلِيلًاۖ إِنَّكَ مِنْ أَصْحَٰبِ ٱلنَّارِ ⑧

बिर्सिदिन्छ ।[1] तथा अल्लाह (तआ़ला) का साझेदार निर्धारित गर्नथाल्छ, जसबाट (अन्यहरुलाई) त्यसका मार्गबाट विचलित गरोस् । (तपाईं) भनिदिनुस् कि आफ्ना कुफ्रका लाभ केही दिन अरु लिइहाल, (अन्त्यमा) तिमी नरक़वासीहरु मध्येको हुनेछौ ।

أَمَّنْ هُوَ قَٰنِتٌ ءَانَآءَ ٱلَّيْلِ سَاجِدًا وَقَآئِمًا يَحْذَرُ ٱلْءَاخِرَةَ وَيَرْجُوا۟ رَحْمَةَ رَبِّهِۦۗ قُلْ هَلْ يَسْتَوِى ٱلَّذِينَ يَعْلَمُونَ وَٱلَّذِينَ لَا يَعْلَمُونَۗ إِنَّمَا يَتَذَكَّرُ أُو۟لُوا۟ ٱلْأَلْبَٰبِ ⑨

(९) के त्यो व्यक्ति जो रातहरुका समयमा सज्दा एवं उभिनुको स्थितिमा इबादत (उपासना) मा व्यतीत गर्दछ, आख़िरतसित तर्सन्छ तथा आफ्नो प्रभुको दयाको आशा राख्दछ,[2] (तथा जो त्यसका विपरीत हुन्छ, समान हुन सक्दछन्), भन त ज्ञानी तथा

[1]अर्थात् त्यस दुखलाई बिर्सिदिन्छ जसलाई हटाउनका लागि त्यसले अरुहरुलाई छाडेर अल्लाहसित प्रार्थना गर्दथ्यो अथवा त्यस प्रभुलाई बिर्सिदिन्छ जसलाई त्यसले पुकार्दथ्यो तथा उसका सामु विनय गर्दथ्यो, तथा पुनः शिर्कमा लीन भइदिन्छ ।

[2]अभिप्राय यो हो कि एक यो काफ़िर एवं मुश्रिक हो जसको यो दशा छ जो अहिले वर्णित भयो तथा दोस्रो त्यो हो जो दुख-सुखमा रातिको समयमा अल्लाहका समक्ष विनम्रता एवं आज्ञाकारिताको प्रदर्शन गर्दै सज्दाहरुमा तथा ध्यानपूर्वक उभेर व्यतीत गर्दथ्यौ । आख़िरत (परलोक) को भय पनि त्यसको हृदयमा छ तथा प्रभुको दयाको आशा पनि छ अर्थात भय तथा आशा दुबै भावनाहरुले पूर्ण छ, जो वास्तविक ईमान हो । के यी दुबै बराबर हुन सक्दछन् ? होइन, निश्चय होइन । भय तथा आशाका विषयमा हदीस छ, आदरणीय अनस भन्नुहुन्छ कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम एक व्यक्तिका पासमा जानुभयो जबकि त्यसमाथि मृत्युको दशा आच्छादित थियो उहाँले त्यससित सोध्नुभयो, तिमी स्वयंलाई कस्तो पाउँछौ ? उसले भन्यो, "म अल्लाहसित आशा राख्दछु तथा आफ्ना दोषहरुका कारण तर्सन्छु पनि ?" रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "यस अवसरमा जसका हृदयमा यी दुबै कुरा एकातिर हुनजान्छन् त अल्लाह तआ़ला उसलाई त्यो कुरो प्रदान गर्दछ जसको त्यो आशा राख्दछ तथा त्यसबाट त्यसलाई बचाइहाल्छ जसको त्यो भय राख्दछ ।" (तिर्मिजी, इब्ने माजा, किताबुज़्ज़ुहुद, बाब ज़िकरील मौते वल इस्तेअदादे लहू)

अज्ञानीका समान छन् ?[1] निःसन्देह शिक्षा तिनै ग्रहण गर्दछन् जो बुद्धिमानी हुन्छन् ।[2]

قُلْ يٰعِبَادِ الَّذِيْنَ اٰمَنُوا اتَّقُوْا رَبَّكُمْ ۭ لِلَّذِيْنَ اَحْسَنُوْا فِيْ هٰذِهِ الدُّنْيَا حَسَنَةٌ ۭ وَاَرْضُ اللّٰهِ وَاسِعَةٌ ۭ اِنَّمَا يُوَفَّى الصّٰبِرُوْنَ اَجْرَهُمْ

(१०) भनिदिनुस् कि हे मेरो ईमान भएका भक्तहरु ! आफ्ना प्रभुसित तर्सिराख,[3] जो यस लोकमा पुण्य गर्दछन् उनका लागि उत्तम प्रतिफल छ,[4] तथा अल्लाह (तआला) को धर्ती अत्यन्त विस्तृत छ,[5] धैर्यवानहरुलाई नै उनको पूरा-पूरा

[1]अर्थात् जो जान्दछन् कि अल्लाहले जो प्रतिफल एवं दण्डको वचन दिएको छ त्यो सत्य छ तथा जो यस कुरालाई जान्दैनन्, यी दुबै बराबर हुन सक्दैनन्, एउटा ज्ञानी छ तथा एउटा अज्ञानी, जुनप्रकार ज्ञान तथा अज्ञानमा अन्तर छ, त्यसैप्रकार ज्ञानी तथा मूर्ख बराबर छैनन् । ज्ञानी तथा मूर्खका उदाहरणबाट यो बुझ्नु उद्देश्य हो कि जुनप्रकार यी दुबै समान छैनन्, अल्लाहका आज्ञाकारी तथा अवज्ञाकारी दुबै समान छैनन् । केही ज्ञाताहरुले यसको अभिप्राय यो भनेका छन् कि ज्ञानीसित तात्पर्य त्यो व्यक्ति हो जो ज्ञान अनुसार कर्म पनि गर्दछ किनकि त्यही ज्ञानबाट लाभ प्राप्त गर्दछ तथा जो कर्म गर्दैन त्यो मानौं यस्तै छ जसलाई ज्ञान नै छैन । यस आधारमा यो कर्मकर्ता तथा अकर्मीको उदाहरण हो कि दुबै बराबर छैनन् ।

[2]तथा यी ईमान भएकै हुन न कि काफिर । यद्यपि तिनी स्वयंलाई बुद्धिमानी एवं ज्ञानी नै ठान्दछन् किन्तु जब तिमी आफ्नो नीति तथा बुद्धिको प्रयोग गरी चिन्तन-मनन नै गर्दैनन् तथा शिक्षा-दिक्षा ग्रहण गर्दैनन् त तिनी पशुका समान बुद्धि एवं ज्ञानबाट बञ्चित छन् ।

[3]त्यसको आज्ञापालन गरेर, अवज्ञाबाट बचेर तथा इबादत एवं अनुपालनलाई उसका लागि विशुद्ध गरेर ।

[4]यो تقوى (संयम) का लाभ हुन् । उत्तम प्रतिफलसित अभिप्राय स्वर्ग तथा उसका अनन्त उपहार हुन् । केही في هذه الدنيا लाई حَسنةٌ सित सम्बन्धित मानेर अनुवाद गर्दछन् "जो पुण्य गर्दछन् उनका लागि संसारमा राम्रो प्रतिफल छ" अर्थात अल्लाह उनलाई संसारमा स्वास्थ एवं सुविधा, सफलता तथा धन-सम्पत्ति आदि प्रदान गर्दछ । किन्तु प्रथम भावार्थ नै अधिक सही छ ।

[5]यो संकेत हो त्यस कुरातिर कि यदि आफ्ना देशमा ईमान तथा संयममाथि कर्म गर्नु कठिन हो त त्यहाँ रहनु राम्रो छैन बरु त्यहाँबाट हिज्रत (स्थानान्तरण) गरी यस्ता क्षेत्रमा गइहाल्नुपर्छ, जहाँ मानिस अल्लाहका आदेशहरुका अनुसार जीवन निर्वाह गर्न सकोस् तथा जहाँ इमाम एवं संयमका मार्गमा रोकावट नहोस् ।

بِغَيْرِ حِسَابٍ ⑩

अनगिन्ती प्रतिफल दिइन्छ ।[1]

قُلْ إِنِّيٓ أُمِرْتُ أَنْ أَعْبُدَ ٱللَّهَ مُخْلِصًا لَّهُ ٱلدِّينَ ⑪

(११) (तपाईं) भनिदिनुस् कि मलाई आदेश दिइएको छ कि अल्लाह (तआ़ला) को यसप्रकार इबादत गरूँ कि उसैका लागि इबादतलाई विशुद्ध गरिहालूँ ।

وَأُمِرْتُ لِأَنْ أَكُونَ أَوَّلَ ٱلْمُسْلِمِينَ ⑫

(१२) तथा मलाई आदेश भएको छ कि म प्रथम आज्ञाकारी बनिहालूँ ।[2]

قُلْ إِنِّيٓ أَخَافُ إِنْ عَصَيْتُ رَبِّي عَذَابَ يَوْمٍ عَظِيمٍ ⑬

(१३) भनिदिनुस् कि मलाई त आफ्ना प्रभुको अवज्ञा गर्दा ठूला दिनको यातनाको भय लाग्दछ ।

قُلِ ٱللَّهَ أَعْبُدُ مُخْلِصًا لَّهُۥ دِينِي ⑭

(१४) भनिदिनुस् कि म त शुद्ध रुपमा मात्र अल्लाहकै इबादत गर्दछु ।

فَٱعْبُدُوا۟ مَا شِئْتُم مِّن دُونِهِۦ

(१५) तिमी त्यसका अतिरिक्त जसको चाहन्छौ पूजा गर्दैरह, भनिदिनुस् कि वास्तवमा

[1]यसैप्रकार ईमान तथा संयमका मार्गमा कठिनाई पनि अनिवार्य तथा मनोकांक्षाहरुको त्याग पनि आवश्यक छ, जसका लागि धैर्यको आवश्यकता छ । यसकारण धैर्यवानको महत्व पनि वर्णित गरिएको छ कि उनलाई उनका धैर्यका लागि यसप्रकार पूरा-पूरा प्रतिफल दिइनेछ कि त्यसलाई हिसाबका मापले नाप्नु सम्भव हुनेछैन । अर्थात् उनको प्रतिफल असीम हुनेछ किनकि जुन कुरोको हिसाब हुन्छ त्यसको त एउटा सीमा हुन्छ तथा जसको कुनै सीमा तथा अन्त हुँदैन त्यो त्यही हुन्छ जसको गणना सम्भव नहोस् । धैर्यको यो बडो महत्व छ जसलाई प्रत्येक मुसलमानलाई प्राप्त गर्नुको प्रयास गर्नुपर्दछ, यसकारण कि रुनु-विलाप तथा अधैर्यताबाट आएको विपदा टर्न सक्दैन, जुन राम्रो कुरो एवं लाभबाट वञ्चित भइसकेको छ त्यो प्राप्त हुँदैन तथा जुन अप्रिय अवस्था आइसकेको हुन्छ त्यसको निराकरण सम्भव छैन । जब यस्तो छ त मानिस धैर्यधारण गरी त्यो महान प्रतिफल किन प्राप्त नगरोस् जो धैर्यवानहरुका लागि अल्लाहले राखेको छ ।

[2]प्रथम यस अर्थमा कि पूर्वजहरुका धर्मको विरोध गरेर तौहीद (अद्वैत) को आमन्त्रण सर्वप्रथम उहाँले नै प्रस्तुत गर्नुभयो ।

قُلْ إِنَّ الْخَٰسِرِينَ الَّذِينَ خَسِرُوٓا أَنفُسَهُمْ وَأَهْلِيهِمْ يَوْمَ الْقِيَٰمَةِ ۗ أَلَا ذَٰلِكَ هُوَ الْخُسْرَانُ الْمُبِينُ ﴿١٥﴾

क्षतिग्रस्त त्यही हो जो स्वयं आफूलाई तथा आफ्ना परिवारलाई केयामतका दिन हानिमा पार्नेछन् । याद राख कि खुल्ला घाटा यही हो ।

لَهُم مِّن فَوْقِهِمْ ظُلَلٌ مِّنَ النَّارِ وَمِن تَحْتِهِمْ ظُلَلٌ ۚ ذَٰلِكَ يُخَوِّفُ اللَّهُ بِهِۦ عِبَادَهُۥ ۚ يَٰعِبَادِ فَاتَّقُونِ ﴿١٦﴾

(१६) उनीहरुलाई तल-माथिबाट आगोका ज्वाला छतको जस्तै छोपिराखेका हुन्छन् ।[1] यही यातना हो जसबाट अल्लाह (तआ़ला) आफ्ना भक्तहरुलाई तर्साइराखेको छ ।[2] हे मेरा भक्तहरु ! मसित तर्सिराख ।

وَالَّذِينَ اجْتَنَبُوا الطَّٰغُوتَ أَن يَعْبُدُوهَا وَأَنَابُوٓا إِلَى اللَّهِ لَهُمُ الْبُشْرَىٰ ۚ فَبَشِّرْ عِبَادِ ﴿١٧﴾

(१७) तथा जसले अल्लाहका अतिरिक्त तागुत (अरुहरु) को इबादतबाट बचाव गरे तथा तनमनले अल्लाह (तआ़ला) तिर आकर्षित रहे, उनी शुभ-सूचनाका अधिकारी छन् तसर्थ मेरा भक्तहरुलाई शुभ-सूचना सुनाइदिनुस् ।

الَّذِينَ يَسْتَمِعُونَ الْقَوْلَ فَيَتَّبِعُونَ أَحْسَنَهُۥٓ ۚ أُولَٰٓئِكَ الَّذِينَ هَدَىٰهُمُ اللَّهُ ۖ وَأُولَٰٓئِكَ هُمْ أُولُوا الْأَلْبَٰبِ ﴿١٨﴾

(१८) जो कुरालाई कान थापेर सुन्दछन् अनि जो अति उत्तम कुरा छ[3] त्यसका अनुसार कार्य गर्दछन् यिनै हुन् जसलाई अल्लाह (तआ़ला) ले मार्गदर्शन दिएको छ तथा यिनै बुद्धिमान पनि छन् ।[4]

[1] ظُلَلٌ यो ظُلَّةٌ को बहुवचन हो, छायाँ । यहाँ नरकका श्रेणी अभिप्राय छन् अर्थात् उनका माथि-तल आगोका तहहरु हुनेछन् जो उनीमाथि उत्तेजित भइराख्नेछन् । (फ़तहुल क़दीर)

[2] अर्थात् यही उपरोक्त खुल्ला क्षति एवं अग्नि ज्वालाको यातना हो जसबाट अल्लाह तआ़ला आफ्ना भक्तहरुलाई तर्साउँछ ताकि उनी अल्लाहको आज्ञाकारिताको मार्ग अपनाएर यस दुष्परिणामबाट सुरक्षित हुनसकून् ।

[3] أَحْسَنَ (सर्वोत्तम) सित सुदृढ तथा पक्का कुरा अभिप्राय हो तथा अनुमत कुराहरुमा सर्वोत्तम अथवा निश्चय तथा आज्ञाबाट निश्चय अथवा दण्डको अपेक्षा क्षमालाई रुचाउँछन् ।

[4] किनकि उनीहरुले आफ्नो बुद्धिबाट लाभ लिएका छन् जबकि अरुहरुले आफ्नो बुद्धिहरुबाट लाभ उठाउन सकेनन् ।

أَفَمَنْ حَقَّ عَلَيْهِ كَلِمَةُ الْعَذَابِ ۖ أَفَأَنْتَ تُنْقِذُ مَنْ فِي النَّارِ ﴿١٩﴾

(१९) तसर्थ जुन व्यक्तिमाथि यातनाको कुरो सिद्ध भइसकेको छ,[१] त के तपाईं उसलाई जो नरक्मा छ छुटकारा दिलाउन सक्नुहुन्छ ।[२]

لَٰكِنِ الَّذِينَ اتَّقَوْا رَبَّهُمْ لَهُمْ غُرَفٌ مِنْ فَوْقِهَا غُرَفٌ مَبْنِيَّةٌ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ ۖ وَعْدَ اللَّهِ ۖ لَا يُخْلِفُ اللَّهُ الْمِيعَادَ ﴿٢٠﴾

(२०) हो उनीहरु जो आफ्ना प्रभुको भय गर्दैरहे उनका लागि उच्च भवन छन्, जसकामाथि पनि बनाइएका अट्टारीहरु छन् ।[३] तथा उनका मुनि जलस्रोत प्रवाहित भइराखेका छन् । प्रभुको वचन छ,[४] तथा त्यसले वचन भङ्ग गर्दैन ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ أَنْزَلَ مِنَ السَّمَاءِ مَاءً فَسَلَكَهُ يَنَابِيعَ فِي الْأَرْضِ

(२१) के तपाईंले देख्नुभएन कि अल्लाह (तआला) आकाशबाट पानी उतार्दछ तथा त्यसलाई धर्तीका स्रोतहरुमा पुऱ्याउँछ ।[५] अनि

[१]अर्थात् भाग्य तथा कर्मलेखका आधारमा त्यसको यातनाको अधिकार सिद्ध भइसकेको छ । यसप्रकार कि अत्याचार एवं कुफ्र तथा अपराध एवं कुरतामा आफ्नो अन्तिम सीमालाई पुगिसक्यो जहाँबाट त्यसको फिर्ताहुने कुरो सम्भव छैन, जस्तै अबूजहल तथा आस पुत्र वाएल आदि, तथा पापहरुले उसको पूर्णतालाई घेरिहाल्यो तथा त्यो नरकवासी भइहाल्यो ।

[२]नवी सल्लल्लाहु अलैहि वसल्लमलाई, किनकि यस कुराको अति इच्छा थियो कि मेरो जातिका सबै मानिसं ईमान स्वीकार गरिहालून् । त्यसमा अल्लाह महानले उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दियो तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई भन्यो कि तपाईंको इच्छा आफ्नो ठाउँमा अत्यन्त सही एवं उचित छ किन्तु उसको भाग्य प्रभावी भयो तथा अल्लाहको वचन उसका विषयमा सिद्ध भइहाल्यो । त्यसलाई तपाईं नरक्को अग्निबाट बचाउन समर्थ हुनुहुन्न ।

[३]यसको अभिप्राय यो हो कि स्वर्गमा श्रेणीहरु हुनेछन् । जस्तो यहाँ बहुश्रेणी भवन छन्, स्वर्गमा पनि श्रेणीहरुका हिसाबले एक-अर्कामाथि अट्टारीहरु हुनेछन्, जसकामध्ये स्वर्गवासीहरुको इच्छा अनुसार दूध, मधु, मदिरा तथा जलका नहरहरु प्रवाहित रहनेछन् ।

[४]जो उसले आफ्ना आत्मा ईमान भएका दासहरुसित गरेको छ तथा जो निश्चय पूरा हुनेछ कि अल्लाहको वचन भङ्ग सम्भव छैन ।

[५] يَنَابِيعَ यो يَنْبُوعٌ को बहुवचन हो, जलस्रोत । अर्थात् वर्षाद्वारा जल आकाशबाट उत्रन्छ अनि त्यो धर्तीमा संचित हुनजान्छ तथा पुन: स्रोतहरुका रुपमा निस्कन्छ अथवा पोखरी तथा नहरहरुमा एकत्रित हुनजान्छ ।

ثُمَّ يُخْرِجُ بِهِ زَرْعًا مُّخْتَلِفًا أَلْوَانُهُ ثُمَّ يَهِيجُ فَتَرَاهُ مُصْفَرًّا ثُمَّ يَجْعَلُهُ حُطَامًا ۚ إِنَّ فِي ذَٰلِكَ لَذِكْرَىٰ لِأُولِي الْأَلْبَابِ ﴿٢١﴾

उसैद्वारा विभिन्न प्रकारका खेतीहरु उब्जाउन्छ[1] अनि तिनी सुक्दछन् तथा तपाईं तिनलाई पहेंला रङ्गमा देख्नुहुन्छ अनि टुक्रा-टुक्रा पारिदिन्छ ।[2] यसमा बुद्धिमानीहरुका लागि अत्याधिक शिक्षा छ ।[3]

أَفَمَن شَرَحَ اللَّهُ صَدْرَهُ لِلْإِسْلَامِ فَهُوَ عَلَىٰ نُورٍ مِّن رَّبِّهِ ۚ فَوَيْلٌ لِّلْقَاسِيَةِ قُلُوبُهُم مِّن ذِكْرِ اللَّهِ ۚ أُولَٰئِكَ فِي ضَلَالٍ مُّبِينٍ ﴿٢٢﴾

(२२) के त्यो व्यक्ति जसको वक्ष अल्लाह (तआ़ला) ले इस्लामका लागि खोलिदिएको छ त त्यो आफ्ना प्रभुका तर्फबाट एउटा प्रकाशमा छ,[4] तथा विनाश छ तिनका लागि जसका हृदय अल्लाहको स्मरणबाट (प्रभाव लिंदैनन् बरु) कठोर भइसकेका छन् यिनीहरु पूर्णरुपमा विचलनमा परेका छन् ।

[1]अर्थात् त्यस पानीबाट जो एकत्र हुन्छ, अनेक प्रकारका वस्तुहरु उत्पन्न गर्दछ जसका रङ्ग, स्वाद, सुगन्ध परस्पर भिन्न हुन्छन् ।

[2]अर्थात् हरियाली तथा ताजगीका पश्चात ती खेतीहरु सुक्दछन् एवं पहेंलो रुप धारण गर्दछन् तथा त्यसपछि टुक्रा-टुक्रा भइहाल्छन्, जस्तै काठका हाँगाहरु सुकेर भाँचिन्छन् ।

[3]अर्थात् बुद्धिमान यसबाट बुझ्छन् कि संसार यसैका सदृश्य छ, त्यो पनि अति शीघ्र नाश तथा विलय भइहाल्नेछ । यसको शोभा एवं चमक, त्यसकी हरियाली तथा सौन्दर्य एवं त्यसका स्वाद तथा सुविधाहरु सामयिक छन् जससित मानिस लिप्त हुनु हुँदैन बरु मृत्युको तयारीमा लागिरहनुपर्छ, जसपश्चातको जीवन स्थाई छ, जसलाई विनाश छैन । केही विद्वानहरु भन्दछन् कि यो कुर्आन तथा ईमान भएका हृदयहरुको उदाहरण हो । अभिप्राय यो हो कि अल्लाहले आकाशबाट कुर्आन अवतरित गर्‍यो जसलाई त्यो ईमानवालाका हृदयमा प्रविष्ट गर्दछ अनि त्यसद्वारा धर्म बाहिर निकाल्दछ जो एक-अर्कासित उत्तम हुन्छ । तसर्थ ईमान्दार त ईमान तथा विश्वासमा बढेर जान्छ तथा जसका हृदयमा रोग हुन्छ त्यो यस्तो किसिमले सुकेर जान्छ जस्तो खेती सुक्दछ । (फ़तहुल क़दीर)

[4]अर्थात् जसलाई सत्य मान्नु तथा भलाईको बाटो अप्नाउनुको सौभाग्य अल्लाहतिर बाट प्राप्त हुन्छ, के त्यो त्यसका समान हुनसक्छ जसका हृदय इस्लामका लागि कठोर तथा त्यसको वक्ष संकुचित हुन्छ तथा त्यो पथभ्रष्टताका अन्धकारमा भौंतारिएको हुन्छ ।

اَللّٰهُ نَزَّلَ اَحۡسَنَ الۡحَدِيۡثِ كِتٰبًا مُّتَشَابِهًا مَّثَانِيَ ۖ تَقۡشَعِرُّ مِنۡهُ جُلُوۡدُ الَّذِيۡنَ يَخۡشَوۡنَ رَبَّهُمۡ ۚ ثُمَّ تَلِيۡنُ جُلُوۡدُهُمۡ وَقُلُوۡبُهُمۡ اِلٰى ذِكۡرِ اللّٰهِ ؕ ذٰلِكَ هُدَى اللّٰهِ يَهۡدِىۡ بِهٖ مَنۡ يَّشَآءُ ؕ وَمَنۡ يُّضۡلِلِ اللّٰهُ فَمَا لَهٗ مِنۡ هَادٍ ﴿٢٣﴾

(२३) अल्लाह (तआ़ला) ले सर्वोत्तम वाणी अवतरित गरेको छ, जो यस्तो किताब छ कि आपसमा मिल्दोजुल्दो तथा बारम्बार दोहोर्‍याइएका आयतहरुको हो,[1] जसबाट ती मानिसहरुका शरीर काम्छन् जो आफ्ना प्रभुको भय राख्दछन्,[2] अन्तमा उनका शरीर एवं हृदय अल्लाह तआ़लाका वर्णनतिर (कोमल भई) झुकिहाल्छन् ।[3] यो हो

[1] أحسن الحديث (उत्तम वाणी) सित अभिप्राय ईशवाणी पवित्र क़ुर्आन हो । मिल्दो-जुल्दोका अभिप्राय उत्तम भाषा, चमत्कार एवं प्रभाव तथा सत्यार्थ आदि सद्गुणहरुमा त्यसका सारा अंश परस्पर मिल्छन्, अर्थात् यो पनि आकाशीय आदि ग्रन्थहरुसित मिल्छ अर्थात् उनका सदृश्य छ । مثاني जसमा वाक्य, घटना, शिक्षा एवं आदेशहरुलाई दोहोर्‍याइको छ ।

[2] किनकि उनी ती चेतावनी, भय एवं धम्कीहरुलाई बुझ्दछन् जो अवज्ञाकारीहरुका लागि छ ।

[3] अर्थात् जब अल्लाहको दया तथा करुणा एवं कृपाको आशा उनका हृदयमा जाग्दछ त उनमा तपन तथा नम्रता पैदा हुनजान्छ तथा उनी अल्लाहका स्मरणमा लीन हुनजान्छ । आदरणीय कतादः रजीअल्लाह अन्हा भन्नुहुन्छ कि यसमा अल्लाहका मित्रहरुका गुणहरुको वर्णन गरिएको छ कि अल्लाह भयले उनका हृदय कामिहाल्छन् । उनका आँखाबाट आँसू बग्न थाल्छन् तथा उनका हृदयलाई अल्लाहको स्मरणले सन्तोष सुलभ हुन्छ । यो हुँदैन कि उनी बेसुध तथा मुग्ध भइहालून् तथा बुद्धि एवं चेतना शेष नरहोस्, किनकि यो विदअतिहरुको स्वभाव हुन् तथा यसमा शैतानको हस्तक्षेप हुन्छ (इब्ने क़सीर) । जस्तो आज पनि विदअतिहरुका कौवालीहरुमा यसैप्रकारका शैतानी गतिविधिहरु सामान्य छन् जसलाई उनी वजद अथवा हल (मस्तिमा झुम्नु) भन्दछन् । इमाम इब्ने क़सीर भन्नुहुन्छ कि ईमानवालाहरुको आचरण यस विषयमा काफ़िरहरुसित कैयन् कारणहरुले भिन्न हुन्छन्, एउटा यो कि ईमानवालाहरुबाट सुन्नु पवित्र क़ुर्आनको पाठ हुन्छ जबकि काफ़िरहरुका सुन्नु निर्लज्ज गायिकाहरुका स्वरमा गाउनु, बजाउनु, सुन्नु हो, (जस्तै विदअतिहरुको सुन्नु मुशरिकाना अतिश्योक्तिमा निर्भर कौवाली एवं नातहरुमा छन्), दोस्रो यो कि ईमानवाला क़ुर्आन सुनेर शिष्टाचार तथा भयले, आशा एवं प्रेमले तथा ज्ञान एवं बोधले रुन थाल्छन् तथा सजदामा झुक्छन् जबकि काफ़िर हल्ला गर्दछन् तथा क्रिडामा संलग्न रहन्छन्, तेस्रो ईमानवाला क़ुर्आन सुन्नेमात्र शिष्टाचार तथा विनम्रता अप्नाउँछन्,

अल्लाह (तआ़ला) को मार्गदर्शन जसद्वारा जसलाई चाहन्छ सत्यमार्ग देखाउँछ, तथा जसलाई अल्लाह (तआला) नै मार्ग-विचलित गरिदिन्छ त्यसको मार्गदर्शक कोही छैन ।

(२४) त जो व्यक्ति केयामतका दिनको अत्याधिक नराम्रा यातनाहरुको ढाल आफ्ना मुखलाई बनाउने (यस्ता) अत्याचारीहरुसित भनिनेछ कि आफूबाट गरिएका कर्महरुको (स्वाद) चाख ।[1]

أَفَمَن يَتَّقِي بِوَجْهِهِۦ سُوٓءَ ٱلْعَذَابِ يَوْمَ ٱلْقِيَٰمَةِ ۚ وَقِيلَ لِلظَّٰلِمِينَ ذُوقُوا۟ مَا كُنتُمْ تَكْسِبُونَ ﴿٢٤﴾

(२५) उनीभन्दा पूर्व भएकाले पनि झुठ्लाए अनि उनीमाथि त्यहाँबाट प्रकोप आइपुग्यो जहाँबाट उनलाई अनुमान पनि थिएन ।[2]

كَذَّبَ ٱلَّذِينَ مِن قَبْلِهِمْ فَأَتَىٰهُمُ ٱلْعَذَابُ مِنْ حَيْثُ لَا يَشْعُرُونَ ﴿٢٥﴾

(२६) तथा अल्लाह (तआ़ला) ले उनीहरुलाई सांसारिक जीवनका अपमानको स्वाद चखायो,[3] तथा अहिले आखिरतको त अति कठोर यातना छ । काश ! यिनीहरु बुझ्थे ।

فَأَذَاقَهُمُ ٱللَّهُ ٱلْخِزْىَ فِى ٱلْحَيَوٰةِ ٱلدُّنْيَا ۖ وَلَعَذَابُ ٱلْءَاخِرَةِ أَكْبَرُ ۚ لَوْ كَانُوا۟ يَعْلَمُونَ ﴿٢٦﴾

(२७) निश्चय नै हामीले यस कुर्आनमा मानिसहरुका लागि हरप्रकारका उदाहरण वर्णन गरिदिएका

وَلَقَدْ ضَرَبْنَا لِلنَّاسِ فِى هَٰذَا ٱلْقُرْءَانِ

जस्तै नबीका सहचरहरु (सहाबा-किराम) को शुभ-आचरण थियो, जसवाट उनका रौंहरु ठाडा हुन्थे तथा उनका हृदय अल्लाहतिर झुक्दथे (इब्ने क़सीर)

[1]अर्थात् के यो व्यक्ति त्यस व्यक्तिको समान हुनसक्छ जो प्रलयका दिन अत्यन्त निर्भय तथा शान्त हुनेछ ? अर्थात् लुप्त वाक्य मिलाएर यसको यो भावार्थ हुनेछ ।

[2]तथा उनीहरुलाई यी यातनाहरुबाट कोही बचाउन सकेन ।

[3]यो मक्काका काफ़िरहरुको चेतावनी हो कि विगत सम्प्रदायहरुले पैग़म्बरहरुलाई झुठ्लाए त उनको यो दुर्दशा भयो तथा तिमी सर्वश्रेष्ठ रसूल तथा सर्वोत्तम व्यक्तिलाई झुठ्लाउँदै गरेका हौ त तिमीलाई पनि यस झुठ्लाउनुको दुष्परिणामबाट तर्सनुपर्छ ।

مِنۡ كُلِّ مَثَلٍ لَّعَلَّهُمۡ يَتَذَكَّرُونَ ۝٢٧

छौं हुनसक्छ कि उनीहरु शिक्षा ग्रहण गरिहालून् ।[1]

قُرۡءَانًا عَرَبِيًّا غَيۡرَ ذِي عِوَجٍ لَّعَلَّهُمۡ يَتَّقُونَ ۝٢٨

(२८) अरवी भाषामा कुर्आन छ जसमा कुनै वाङ्गोपना छैन, हुनसक्छ कि उनी संयम धारण गरून् ।[2]

ضَرَبَ ٱللَّهُ مَثَلًا رَّجُلًا فِيهِ شُرَكَآءُ مُتَشَٰكِسُونَ وَرَجُلًا سَلَمًا لِّرَجُلٍ هَلۡ يَسۡتَوِيَانِ مَثَلًاۚ ٱلۡحَمۡدُ لِلَّهِۚ بَلۡ أَكۡثَرُهُمۡ لَا يَعۡلَمُونَ ۝٢٩

(२९) अल्लाह (तआला) उदाहरण वर्णन गरिराखेको छ कि एउटा त्यो व्यक्ति जसमा धेरै परस्पर भिन्नता राख्ने साझेदार छन् तथा दोस्रो त्यो व्यक्ति जो मात्र एउटैका (दास) छ, के यी दुवै गुणहरुमा एक समान छन् ।[3] सारा प्रशंसा अल्लाह (तआला) कै लागि छन् ।[4] कुरो यो छ कि उनीहरुमध्ये अधिकतर मानिस अज्ञानी छन् ।[5]

---

[1]अर्थात् मानिसहरुलाई सम्झाउनका लागि हरेक प्रकारका उदाहरण दियौं ताकि मानिसहरुको वुद्धिमा कुरा वसिहालून् तथा सदुपदेश प्राप्त गरून् ।

[2]अर्थात् पवित्र कुर्आन स्वच्छ अरवी भाषामा छ, जसमा कुनै टेढोपना, विमुखता एवं भ्रम छैन ताकि मानिस तिनमा वर्णित चेतावनीहरुसित तर्सुन तथा त्यसमा वर्णित वचनहरुका पात्र वन्नका लागि कर्म गरून् ।

[3]यसमा मुश्रिक (अल्लाहका साझेदार वनाउनेहरु) तथा मुख़्लिस (मात्र अल्लाहका लागि इवादत गर्नेहरु) को उदाहरण दिइएको छ । अर्थात् एउटा दास छ जो कैयन् व्यक्तिहरुको साझेदारीको छ जो आपसमा झगडा गरिरहन्छन् तथा एउटा अन्य दास छ जसको स्वामी केवल एउटै व्यक्ति छ तथा त्यसका स्वामित्वमा त्यसको कोही साझेदार छैन, के यी दुवै दास समान हुनसक्छन् ? होइन, वस्तुतः होइन । यसैप्रकार त्यो मुश्रिक जो अल्लाहका साथ अन्य पूज्यहरुको पनि वन्दना गर्दछ तथा त्यो विशुद्ध ईमानवाला यो केवल एक अल्लाहको उपासना गर्दछ तथा त्यसका साथ कसैलाई साझेदार वनाउँदैन, वरावर हुन सक्दैनन् ।

[4]यस कुरामा कि उसले तर्क स्थापित गरिदियो ।

[5]यसकारण अल्लाहका साझेदार वनाउँछन् ।

إِنَّكَ مَيِّتٌ وَإِنَّهُم مَّيِّتُونَ ﴿٣٠﴾

(३०) नि:सन्देह स्वयं तपाईंलाई पनि मृत्यु आउनेछ तथा यी सबै पनि मर्नेहरु हुन् ।

ثُمَّ إِنَّكُمْ يَوْمَ الْقِيَامَةِ عِندَ رَبِّكُمْ تَخْتَصِمُونَ ﴿٣١﴾

(३१) अनि तिमी सबै केयामतका दिन आफ्ना प्रभुका समक्ष झगडा गर्नेछौ ।[1]



[1]अर्थात् हे पैग़म्बर, तपाईं पनि तथा तपाईंका विरोधी पनि मरेर यस संसारबाट हाम्रा छेउ आख़िरत (परलोक) मा आउनेछन् । संसारमा त एकेश्वरवाद (तौहीद) तथा मिश्रणवाद (शिर्क) को निर्णय तिम्रा बीच हुन सकेन तथा तिमी यसका विषयमा झगडा गर्दैरहयौ । किन्तु यहाँ म यसको निर्णय गरिदिनेछु तथा शुद्ध एकेश्वरवादीहरुलाई स्वर्गमा एवं नकार्ने झूठा मिश्रणवादीहरुलाई नरकमा प्रवेश गराउनेछु । यस आयतबाट पनि नबी सल्लल्लाहु अलैहि वसल्लमको मृत्युको प्रमाण पाईन्छ। जुनप्रकार सूर: आले-इमरानको आयत ११४ बाट पनि थाहा हुन्छ तथा यिनै आयतहरुबाट भाव निकालेर आदरणीय अबू-बक्र सिद्दीकले उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) को मृत्युलाई सिद्ध गरेका थिए। अत: नबी सल्लल्लाहु अलैहि वसल्लमका विषयमा यो आस्था राख्नु कि उहाँलाई बरज़ख़ (मृत्युका पश्चातदेखि प्रलयसम्मका बीचको अवधि) मा त्यसैप्रकार जीवन प्राप्त छ जुनप्रकार संसारमा प्राप्त थियो, पवित्र कुर्आनका विपरीत छ । उहाँलाई पनि अन्य मनुष्यहरुजस्तै मृत्यु भयो, यसकारण उहाँलाई दफन गरियो । कब्रमा उहाँलाई बर्ज़ख़ी (मध्य) को जीवन त अवश्य प्राप्त छ जसको दशाको हामीलाई ज्ञान छैन । परन्तु कब्रमा (चिहानमा) उहाँलाई पनि पुन: सांसारिक जीवन प्रदान गरिएन ।

فَمَنْ أَظْلَمُ مِمَّن كَذَبَ عَلَى اللَّهِ وَكَذَّبَ بِالصِّدْقِ إِذْ جَاءَهُ ۚ أَلَيْسَ فِي جَهَنَّمَ مَثْوًى لِّلْكَافِرِينَ ﴿٣٢﴾

(३२) त्यसभन्दा अधिक अत्याचारी को छ जो अल्लाह तआलामाथि झूठा कुरा गर्छ[1] तथा सत्य (धर्म) उसको पासमा आउँछ त त्यसलाई असत्य बताउँछ ?[2] के यस्ता काफ़िरहरुको वासस्थान नरक होइन ?

وَالَّذِي جَاءَ بِالصِّدْقِ وَصَدَّقَ بِهِ ۙ أُولَٰئِكَ هُمُ الْمُتَّقُونَ ﴿٣٣﴾

(३३) तथा जो सत्य (धर्म) ल्याए[3] तथा जो त्यसलाई सत्य ठाने[4] यिनै संयमी हुन् ।

لَهُم مَّا يَشَاءُونَ عِندَ رَبِّهِمْ ۚ ذَٰلِكَ جَزَاءُ الْمُحْسِنِينَ ﴿٣٤﴾

(३४) उनका लागि उनका प्रभुका पासमा (प्रत्येक) त्यो वस्तु छ जो यिनी चाहन्छन्,[5] सदाचारीहरुको यही प्रतिफल हो ।[6]

[1]अर्थात् दावा गर्छ कि अल्लाहको सन्तान छ अथवा उसको साझेदार अथवा उसकी पत्नी छ जबकि उहाँ यी सबैबाट पवित्र हुनुहुन्छ ।

[2]जसमा तौहीद (एकेश्वरवाद) छ, ईश्वरादेश तथा अनिवार्य कर्म छ, पुनर्जीवनको विश्वास, अवैध कर्महरुबाट बचाव छ तथा ईमानवालाहरुका लागि शुभ-सूचना तथा काफ़िरहरुका लागि चेतावनीहरु छन् । यो धर्म तथा धर्मविधान जो महाआदरणीय मुहम्मद रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम लिएर आएर त्यसले मिथ्या (झूठा) बताउँछ ।

[3]यसबाट अभिप्राय इस्लामका सन्देष्टा महाआदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम हुनुहुन्छ जो सत्यधर्म लिएर आए । केही विद्वानहरुका निकट यो सामान्य छ, तथा यसबाट प्रत्येक त्यो व्यक्ति अभिप्राय छ जो तौहीद (एकेश्वरवाद) को आमन्त्रण दिन्छ तथा अल्लाहका धर्म-विधानतिर मानिसहरुको मार्गदर्शन गर्दछ ।

[4]के यो ज्ञाताहरुले यसबाट तात्पर्य आदरणीय अबू बक्र सिद्दीक रज़ी अल्लाहु अन्हु लिएका छन् जसले सबभन्दा पहिला रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको पुष्टि गर्नुभयो तथा उहाँमाथि ईमान स्वीकार गर्नुभयो । केही धर्मविदहरुले यसलाई पनि सामान्य राखेका छन् जसमा सबै ईमानवालाहरु सम्मिलित छन् जो रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमको रिसालत (ईशदूत हुने कुरामा) विश्वास (ईमान) राख्दछन् तथा उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई सच्चा मान्दछन् ।

[5]अर्थात् अल्लाह तआलाले उनका पाप पनि क्षमा गरिदिनेछ तथा उनका पद पनि उच्च गरिदिनेछ किनकि प्रत्येक मुसलमानको अल्लाहसित यही आकांक्षा हुन्छ । यसका अतिरिक्त स्वर्गमा जानुका पश्चात प्रत्येक मनले रुचाएका कुरा पनि प्राप्त हुनेछ ।

[6]مُحسنين एक अर्थ त यो हो कि जो पुण्यकारी छन्, दोस्रो जो विशुद्धताका साथ इबादत

لِيُكَفِّرَ اللَّهُ عَنْهُمْ أَسْوَأَ الَّذِي عَمِلُوا وَيَجْزِيَهُمْ أَجْرَهُم بِأَحْسَنِ الَّذِي كَانُوا يَعْمَلُونَ ﴿٣٥﴾

(३५) ताकि अल्लाह (तआला) ले उनीबाट उनका नराम्रा कर्महरुलाई मिटाइदेओस् तथा जो पुण्यकार्य उनीहरुले गरेका छन् उनको उत्तम प्रतिफल प्रदान गरोस् ।

أَلَيْسَ اللَّهُ بِكَافٍ عَبْدَهُ ۖ وَيُخَوِّفُونَكَ بِالَّذِينَ مِن دُونِهِ ۚ وَمَن يُضْلِلِ اللَّهُ فَمَا لَهُ مِنْ هَادٍ ﴿٣٦﴾

(३६) के अल्लाह (तआला) आफ्ना भक्तहरुका लागि पर्याप्त छैन ?[1] यिनीहरु तपाईंलाई अल्लाहका अतिरिक्त अरुहरुबाट तर्साइराखेका छन्, तथा जसलाई अल्लाह पथभ्रष्ट गरिदिन्छ उसको मार्गदर्शन गर्नेवाला कोही छैन ।[2]

وَمَن يَهْدِ اللَّهُ فَمَا لَهُ مِن مُّضِلٍّ ۗ أَلَيْسَ اللَّهُ بِعَزِيزٍ ذِي انتِقَامٍ ﴿٣٧﴾

(३७) तथा जसलाई अल्लाह मार्गदर्शन प्राप्त गर्दछ, त्यसलाई कोही कुमार्ग गर्नेवाला छैन ।[3] के अल्लाह (तआला) प्रभावशाली एवं बदला लिनेवाला छैन ?[4]

(उपासना) गर्दछन् जस्तो हदीसमा إحسان (एहसान) को यो परिभाषा गरिएको छ «أَنْ تَعْبُدَ اللهَ كَأَنَّكَ تَرَاهُ، فَإِنْ لَمْ تَكُنْ تَرَاهُ فَإِنَّهُ يَرَاكَ» "तिमी अल्लाहको इबादत यस्तो गर कि मानौं तिमी उहाँलाई देखिराखेका छौ । (हदीसको संग्रह मुस्लिम) यदि यो कल्पना सम्भव छैन भने मनमा यो अवश्य रहोस् कि उहाँले तिमीलाई देखिराख्नु भएको छ ।" तेस्रो, जो मानिसहरुका साथ उपकार तथा सद्व्यवहार गर्दछन् । चौथो, प्रत्येक पुण्य कर्म राम्रो ढङ्गले एकाग्रता एवं विनम्रतासित तथा नबी सल्लल्लाहु अलैहि वसल्लमको सुन्नत (आचरण) का अनुसार गर्दछन् । अधिकताको ठाउँमा त्यसको श्रेष्ठताको ध्यान राख्दछन् ।

[1]यसबाट अभिप्राय आदरणीय नबी सल्लल्लाहु अलैहि वसल्लम हुनुहुन्छ । केही ज्ञाताहरुका विचारमा यो सामान्य हो । सबै अम्बिया (ईशदूत) तथा ईमानवालाहरु यसमा सम्मिलित छन् । भावार्थ यो हो कि तपाईंलाई अल्लाहका अतिरिक्त अन्यसित तर्साउन्छन् । परन्तु जब अल्लाह तपाईंको सहाय तथा पक्षधर छ भने तपाईंको कसैले केही बिगार्न सक्दैन, त्यो ती सबैका मुक़ाबिलामा तपाईंलाई पर्याप्त छ ।

[2]जो त्यस भ्रष्टताबाट निकालेर सन्मार्गमा लगाईदिन्छ ।

[3]जो उसको सन्मार्गबाट निकालेर कुमार्गको खाल्डोमा पार्दछन् अर्थात मार्गदर्शन तथा विचलन अल्लाहको हातमा छ, जसलाई चाहन्छ विपथ गरिदिन्छ तथा जसलाई चाहन्छ मार्गदर्शन प्रदान गर्दछ ।

[4]किन होइन, वास्तवमा हो, यसकारण कि यदि यिनीहरु कुफ्र (इन्कार) तथा विरोधबाट नरोकिऊन् भने निश्चय नै त्यसले आफ्ना मित्रहरुका पक्षमा यिनीहरुसित प्रतिशोध लिनेछ तथा उनीहरुलाई शिक्षाप्रद दुष्परिणामको भोगी बनाउनेछ ।

وَلَئِن سَأَلْتَهُم مَّنْ خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ لَيَقُولُنَّ اللَّهُ ۚ قُلْ أَفَرَأَيْتُم مَّا تَدْعُونَ مِن دُونِ اللَّهِ إِنْ أَرَادَنِيَ اللَّهُ بِضُرٍّ هَلْ هُنَّ كَاشِفَاتُ ضُرِّهِ أَوْ أَرَادَنِي بِرَحْمَةٍ هَلْ هُنَّ مُمْسِكَاتُ رَحْمَتِهِ ۚ قُلْ حَسْبِيَ اللَّهُ ۖ عَلَيْهِ يَتَوَكَّلُ الْمُتَوَكِّلُونَ ﴿٣٨﴾

(३८) यदि तपाईं यिनीहरुसित सोध्नुहुन्छ कि आकाश तथा धर्तीलाई कसले सृष्टि गरेको छ त निःसन्देह उनले उत्तर दिनेछन् कि अल्लाहले । तपाईं उनीहरुसित सोध्नुस् कि यो त बताउ कि जसलाई तिमी अल्लाहका अतिरिक्त पुकार्दछौ यदि अल्लाह तआला मलाई हानि पुऱ्याउन चाहन्छ त के यिनीहरु त्यसको हानिलाई हटाउन सक्छन् अथवा अल्लाह तआला ममाथि कृपा गर्न चाहन्छ त के यी त्यसको कृपाबाट रोक्न सक्दछन्, (तपाईं) भनिदिनुस् कि अल्लाह (महान) मलाई पर्याप्त छ ।[1] भरोसा गर्नेहरु उसैमाथि भरोसा गर्दछन् ।[2]

قُلْ يَا قَوْمِ اعْمَلُوا عَلَىٰ مَكَانَتِكُمْ إِنِّي عَامِلٌ ۖ فَسَوْفَ تَعْلَمُونَ ﴿٣٩﴾

(३९) भनिदिनुस् कि हे मेरा समुदायका मानिसहरु, तिमी आफ्ना ठाउँमा कर्म गर्दैजाउ म पनि कर्म गरिराखेको छु,[3] शीघ्र नै तिमी जानिहाल्नेछौ ।

مَن يَأْتِيهِ عَذَابٌ يُخْزِيهِ وَيَحِلُّ

(४०) कि कसमाथि आपमानित गर्ने प्रकोप आउँछ[4] तथा कसमाथि (स्थाई मार

[1]केही विद्वानहरु भन्छन् कि जब नबी सल्लल्लाहु अलैहि वसल्लमले उपरोक्त प्रश्न उनका साम् प्रस्तुत गर्नुभयो त उनीहरुले भने कि उनी अल्लाहका कर्मलेखलाई मेटाउन सक्दैनन् (हो, उनले सिफारिश (अभिस्तावना) गर्नेछन्, जसमाथि यो टुक्रा अवतरित भयो कि मलाई त मेरो विषयमा अल्लाह नै पर्याप्त छ ।

[2]जब सबै कुरा उसैको अधिकारमा छ त त्यसपछि अरुहरुमाथि विश्वास गर्नुको के लाभ ? अतः विश्वासी मानिस उसैमाथि भरोसा गर्दछन्, उसका सिवाय कसैमाथि उनको भरोसा छैन ।

[3]अर्थात् यदि तिमी मेरो तौहीद (अद्वैत) को आमन्त्रणलाई स्वीकार गर्दैनौ जसका साथ अल्लाहले मलाई पठाएको छ त ठीक छ, तिम्रो इच्छा, तिमी आफ्ना स्थितिमा रह जसमा तिमी छौ, म त्यस स्थितिमा रहन्छु जसमा मलाई अल्लाहले राखेको छ ।

[4]जसबाट स्पष्ट भइहाल्नेछ कि सत्यमा को छ तथा असत्यमा को ? यसबाट तात्पर्य सांसारिक यातना हो जस्तो कि बद्रको रणमा भयो । काफिरहरुका सत्तरी व्यक्ति हत तथा सत्तरी नै कैदी भए यहाँसम्मकि मक्का विजयका पश्चात प्रभुत्व एवं अधिपत्य पनि मुसलमानहरुलाई मक्का विजयका पश्चात प्रभुत्व एवं अधिपत्य पनि मुसलमानहरुलाई प्राप्त भयो जस पश्चात काफिरहरुका लागि अपमान तथा अवहेलना

عَلَيْهِ عَذَابٌ مُّقِيمٌ ﴿٤٠﴾

एवं) स्थाई दण्ड हुन्छ ?[1]

إِنَّآ أَنزَلْنَا عَلَيْكَ ٱلْكِتَٰبَ لِلنَّاسِ بِٱلْحَقِّ ۖ فَمَنِ ٱهْتَدَىٰ فَلِنَفْسِهِۦ ۖ وَمَن ضَلَّ فَإِنَّمَا يَضِلُّ عَلَيْهَا ۖ وَمَآ أَنتَ عَلَيْهِم بِوَكِيلٍ ﴿٤١﴾

(४१) तपाईंमाथि हामीले सत्यका साथ यो किताब मानिसहरुका लागि अवतरित गरेका छौं, त जो व्यक्ति सोभ्रो मार्गमा आउँछ त्यसका आफ्ना लागि (लाभ) छ तथा जो विचलित हुन्छ त्यसका विचलनको (भार) उसैमाथि छ, तपाईं त्यसका उत्तरदायी हुनुहुन्न ।[2]

ٱللَّهُ يَتَوَفَّى ٱلْأَنفُسَ حِينَ مَوْتِهَا وَٱلَّتِى لَمْ تَمُتْ فِى مَنَامِهَا ۖ فَيُمْسِكُ

(४२) अल्लाह नै आत्माहरुलाई उनका मृत्युका समय[3] तथा जसको मृत्यु आएन उनलाई उनको निद्राका समय हरण गर्दछ,[4]

---

का अतिरिक्त केही शेष रहेन ।

[1]नबी सल्लल्लाहु अलैहि वसल्लमलाई मक्कावासीहरुका कुफ्रमाथि दुराग्रह साह्रै भारी लाग्थ्यो, यसमा उहाँलाई सान्त्वना दिइएको छ कि तपाईंको कर्तव्यमात्र किताबलाई वर्णन गरिदिनु हो जो हामीले तपाईंमाथि अवतरित गर्‍यौं । तपाईंमाथि उनीहरुलाई मार्गमा ल्याउनुको दायित्व छैन । यदि उनीहरु सन्मार्ग अप्नाउने छन् भने त्यसमा उनीहरुको लाभ छ र यदि यस्तो गर्ने छैनन् भने स्वयं उनैलाई हानि हुनेछ । وكيل को अर्थ भारवाहक तथा उत्तरदायी हो अर्थात तपाईंमाथि उनीहरुलाई मार्ग दर्शाउनुको भार छैन । आगामी आयतमा अल्लाह आफ्ना पूर्ण सामर्थ्य एवं विचित्र कारीगरीको चर्चा गरिराखेको छ जसको अवलोकन मानिस नित्य दिन गर्दछ । त्यो यो हो कि जब त्यो निदाइहाल्छ त उसको आत्मा अल्लाहको आज्ञाले जस्तै निस्कन्छ उसका ज्ञान तथा संवेदनको शक्ति समाप्त भएर जान्छ तथा त्यो जब ब्यूँभन्छ त आत्मा त्यसमा पुन: पठाइन्छ जसबाट त्यसको संवेदन आफ्नो स्थानमा आइहाल्छ । हो, जसको जीवनकाल समाप्त भइसकेको हुन्छ त्यसको आत्मा फर्कन्न तथा त्यो मृत्युको काखमा गइहाल्छ । यसको केही व्याख्याकारहरुले ठूलो मृत्यु तथा सानो मृत्यु पनि भनेका छन् ।

[3]यो महाकाल (ठूलो मृत्यु) हो कि आत्मा निकालिन्छ अनि पुन: फर्कन्न ।

[4]अर्थात् जसको मृत्युको समय अभै आएको छैन त सुतिराखेको समयमा उनको आत्मा पनि निकालेर लघु मृत्युमा परिणत गरिन्छ ।

الَّتِيْ قَضٰى عَلَيْهَا الْمَوْتَ وَيُرْسِلُ الْأُخْرٰٓى إِلٰٓى أَجَلٍ مُّسَمًّى ۚ إِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّتَفَكَّرُوْنَ ﴿٤٢﴾

अनि जसमाथि मृत्युको आदेश भइसकेको छ उनलाई त रोकिहाल्छ[1] तथा अन्य (आत्माहरु) लाई एउटा निर्धारित समयसम्मका लागि छाडिदिन्छ,[2] चिन्तन गर्नेहरुका लागि यसमा निश्चित रुपले धेरै निशानीहरु छन् ।[3]

أَمِ اتَّخَذُوْا مِنْ دُوْنِ اللّٰهِ شُفَعَآءَ ۚ قُلْ أَوَلَوْ كَانُوْا لَا يَمْلِكُوْنَ شَيْـًٔا وَّلَا يَعْقِلُوْنَ ﴿٤٣﴾

(४३) के उनीहरुले अल्लाह तआलाका अतिरिक्त अन्यलाई सिफारिश गर्ने नियुक्त गरेका छन् ? (तपाईं) भनिदिनुस् कि चाहे उनी कुनै पनि अधिकार राख्दैनन् तथा न बुद्धि राख्दछन् ।[4]

قُلْ لِّلّٰهِ الشَّفَاعَةُ جَمِيْعًا ۚ لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْأَرْضِ ۚ ثُمَّ إِلَيْهِ تُرْجَعُوْنَ ﴿٤٤﴾

(४४) भनिदिनुस् कि सबै सिफारिशहरुको स्वामी अल्लाह नै छ ।[5] समस्त आकाशहरु एवं धर्तीको राज्य उसैका लागि छ, तिमी सबै उसैतिर फर्काइनेछौ ।



[1]यो त्यही ठूलो मृत्यु हो जसको चर्चा गरिएको छ कि त्यसमा आत्मा रोकिन्छ ।

[2]अर्थात् जबसम्म उनको निर्धारित समय आउँदैन त्यससमय सम्मका लागि उनका आत्माहरु वापस भइरहन्छन् । त्यो लघु मृत्यु हो । यही विषय सूरः अन्आम ६० तथा ६१ मा वर्णित गरिएको छ । तैपनि त्यहाँ लघुकाल (सानो मृत्यु) को चर्चा पहिले तथा महाकालको पछि छ जबकि यहाँ त्यसका विपरीत छ ।

[3]अर्थात् यो आत्मा निकाल्नु तथा वापस पठाउनु अर्थात् मार्नु तथा जीवन प्रदान गर्नु यस कुराको प्रमाण हो कि अल्लाह महान प्रत्येक वस्तुमाथि सामर्थ्यवान छ तथा त्यो प्रलयका दिन मूर्दाहरुलाई पनि जीवन अवश्य प्रदान गर्नेछ ।

[4]अर्थात् सिफारिश गर्नु त परै जाओस् यिनलाई त सिफारिशका अर्थ तथा भावबारे पनि थाहा छैन किनकि उनी त पत्थर हुन् अथवा निर्बोध ।

[5]अर्थात् सिफारिशका सबैप्रकारको अधिकार मात्र अल्लाहलाई छ । त्यसको अनुमति बिना कोही सिफारिश गर्नसक्ने छैन । अनि एक अल्लाहकै इबादत किन नगरियोस् ताकि त्यो प्रसन्न हुनसकोस् तथा सिफारिशका लागि कुनै सहारा खोज्नुको आवश्यकता नै नरहोस् ।

وَإِذَا ذُكِرَ اللَّهُ وَحْدَهُ اشْمَأَزَّتْ قُلُوبُ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ ۖ وَإِذَا ذُكِرَ الَّذِينَ مِن دُونِهِ إِذَا هُمْ يَسْتَبْشِرُونَ ﴿٤٥﴾

(४५) तथा जब अल्लाह एक्लोको वर्णन गरिन्छ त ती मानिसहरुका हृदय घृणा गर्न थाल्छन्[1] जो आख़िरतमा आस्था राख्दैनन्, तथा जब त्यसका अतिरिक्त (अरुहरु) को वर्णन गरिन्छ त उनका हृदय स्पष्टतः प्रफूलिल्त हुनजान्छन् ।[2]

قُلِ اللَّهُمَّ فَاطِرَ السَّمَاوَاتِ وَالْأَرْضِ عَالِمَ الْغَيْبِ وَالشَّهَادَةِ أَنتَ تَحْكُمُ بَيْنَ عِبَادِكَ فِي مَا كَانُوا فِيهِ يَخْتَلِفُونَ ﴿٤٦﴾

(४६) (तपाईं) भनिदिनुस् कि हे अल्लाह आकाशहरु तथा धर्तीका स्रष्टा गुप्त एवं प्रकटका ज्ञाता, तिमीले नै आफ्ना भक्तहरुमा ती कुराहरुको निर्णय गर्नेछौ जसमा उनीहरु अल्झेका थिए ।[3]

وَلَوْ أَنَّ لِلَّذِينَ ظَلَمُوا مَا فِي الْأَرْضِ

(४७) तथा अत्याचारीहरुका पासमा त्यो सबै कुरा होस् जो धर्तीमा छ तथा त्यसका साथ

[1]अथवा कुफ्र तथा घमण्ड अथवा संकीर्णताको संवेदन गर्दछन् । अभिप्राय यो हो कि मुश्रिकीन (मिश्रणवादीहरु) सित जब यो भनिन्छ कि पूज्य केवल एउटै छ त उनका हृदय यो मान्न तयार हुँदैनन् ।

[2]हो, जब यो भनिन्छ कि अमुक-अमुक पनि पूज्य छन् अथवा ती पनि त अल्लाहका पुनीत भक्तहरु हुन्, उनीहरु पनि त केही अधिकार राख्दछन्, उनी पनि संकटहारी हुन् तथा आवश्यकता पूरा गर्दछन् त यी मुश्रिकिन प्रफुल्ल भइहाल्छन् । आस्था भ्रष्टहरुको आज यही स्थिति छ । जब उनीसित भनिन्छ कि केवल "हे अल्लाह मद्दत" भन, किनकि अल्लाहका अतिरिक्त कोही सहायता गर्नेछैन त खिन्न हुन्छन्, यो कुरा उनीहरुलाई साह्रै नराम्रो लाग्छ । परन्तु जब "या अली मद्दत अथवा या रसूल मद्दत" भनिन्छ, यसैप्रकार अन्य मृतहरुबाट सहायता माँगिन्छ तथा गुहार गरिन्छ, जस्तै "या शेष अब्दुल क़दीर शैअन लिल्लाह" आदि । त फेरि उनका हृदय निकै प्रफुल्ल हुन्छन् ।

[3]हदीसमा वर्णित छ कि नबी सल्लल्लाहु अलैहि वसल्लम रातमा तहज्जुदको नमाज़का प्रारम्भमा यो पढ्ने गर्नुहुन्थ्यो ।

«اللَّهُمَّ! رَبَّ جبريلَ وَميكَائيلَ وَإسرَافِيلَ، فَاطِرَ السَّمَوَاتِ والأَرْضِ، عَالِمَ الغَيبِ والشَّهَادَةِ، أَنتَ تَحكُمُ بَينَ عِبَادِكَ فِيمَا كَانُوا فِيهِ يَختَلِفُونَ، اهْدِنِي لِمَا اختُلِفَ فِيهِ مِنَ الحَقِّ بِإِذْنِكَ، إِنَّكَ تَهْدِي مَن تَشَاءُ إِلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ» .

(सहीह मुस्लिम किताबु सलातिल मुसाफिरीन)

جَمِيعًا وَمِثْلَهُ مَعَهُ لَا فْتَدَوْا بِهِ مِن سُوٓءِ الْعَذَابِ يَوْمَ الْقِيٰمَةِ ۚ وَبَدَا لَهُم مِّنَ اللَّهِ مَا لَمْ يَكُونُوا يَحْتَسِبُونَ ﴿٤٧﴾

त्यतिकै अरु होस्, तैपनि नराम्रा दण्डका साटोमा केयामतका दिन यिनीहरु सबै दिइदिन्छन्,[1] तथा उनका समक्ष अल्लाहतिरबाट त्यो प्रकट हुनेछ जसको अनुमान पनि उनीहरुलाई थिएन ।[2]

وَبَدَا لَهُمْ سَيِّـَٔاتُ مَا كَسَبُوا وَحَاقَ بِهِم مَّا كَانُوا بِهِ يَسْتَهْزِءُونَ ﴿٤٨﴾

(४८) तथा जे-जति उनीहरुले गरेका थिए, त्यसको दुष्परिणाम उनीमाथि खुल्नेछ[3] तथा जसका साथ उनी उपहास गर्दथे त्यसले उनलाई आई घेर्नेछ ।[4]

فَإِذَا مَسَّ الْإِنسَانَ ضُرٌّ دَعَانَا ثُمَّ إِذَا خَوَّلْنَاهُ نِعْمَةً مِّنَّا قَالَ

(४९) मनुष्यलाई जब कुनै कष्ट पुग्दछ त हामीलाई पुकार्दछन्[5], अनि जब हामीले उसलाई आफ्नो तर्फबाट कुनै सुख प्रदान गर्दछौं त भन्न लाग्दछ

---

[1]परन्तु तैपनि त्यो स्वीकार हुनेछैन जस्तो कि अर्को स्थानमा स्पष्ट छ :

﴿فَلَن يُقْبَلَ مِنْ أَحَدِهِم مِّلْءُ الْأَرْضِ ذَهَبًا وَلَوِ افْتَدَىٰ بِهِ﴾

"त्यसले धर्तीभरि सुन पनि साटोमा दिदेओस् त त्यो स्वीकार हुनेछैन ।" (आले-इमरान-९१) यसकारण कि:

﴿وَلَا يُؤْخَذُ مِنْهَا عَدْلٌ﴾

"त्यहाँ साटो अंगीकार गरिने छैन ।" (अल-बकर:-४८)

[3]अर्थात् संसारमा उनी जुन निषेध तथा पापहरु गर्दथे, त्यसको दण्ड उनका सामु आइहाल्नेछ ।

[4]त्यो यातना उनीहरुलाई घेर्नेछ जसलाई उनी संसारमा असंभव ठान्थे, यसकारण त्यसको हाँसो उडाउँथे ।

[5]यो जातिका अनुसार मानवको चर्चा हो । अर्थात् मानिसहरुको बहुसंख्यकको दशा यो छ कि जब उनलाई रोग, भोग अथवा अन्य दुख पुग्दछ त त्यसबाट मुक्ति पाउनका लागि अल्लाहसित प्रार्थनाहरु गर्दछन् तथा उसका सामु विन्ती-याचना गर्दछन् ।

إِنَّمَآ أُوتِيتُهُۥ عَلَىٰ عِلْمٍۭ ۚ بَلْ هِىَ فِتْنَةٌ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٤٩﴾

कि यो त मात्र आफ्नो बुद्धिका कारण प्रदान गरिएको छ ।[1] बरु यो परीक्षा हो,[2] परन्तु उनीमध्ये अधिकतर मानिस अन्जान छन् ।[3]

قَدْ قَالَهَا ٱلَّذِينَ مِن قَبْلِهِمْ فَمَآ أَغْنَىٰ عَنْهُم مَّا كَانُوا۟ يَكْسِبُونَ ﴿٥٠﴾

(५०) तिमीभन्दा पूर्वका मानिस पनि यही कुरा भनिसकेका छन् त उनको कारवाही उनलाई कुनै काम आउने छैन ।[4]

فَأَصَابَهُمْ سَيِّـَٔاتُ مَا كَسَبُوا۟ ۚ وَٱلَّذِينَ ظَلَمُوا۟ مِنْ هَٰٓؤُلَآءِ سَيُصِيبُهُمْ سَيِّـَٔاتُ مَا كَسَبُوا۟ وَمَا هُم بِمُعْجِزِينَ ﴿٥١﴾

(५१) अनि उनका समस्त कुकर्म[5] उनीमाथि आइपरोस्, तर यिनीमध्ये जो पनि पापी छन् उनीबाट गरिएका कुकर्म पनि अब उनीमाथि आइपर्नेछ, यिनीहरु (हामीलाई) पराजित गरिदिनेवाला होइनन् ।[6]

أَوَلَمْ يَعْلَمُوٓا۟ أَنَّ ٱللَّهَ يَبْسُطُ ٱلرِّزْقَ لِمَن يَشَآءُ وَيَقْدِرُ ۚ إِنَّ فِى ذَٰلِكَ لَءَايَٰتٍ

(५२) के उनीहरुलाई यो ज्ञान छैन कि अल्लाह (तआला) जसका लागि चाहन्छ जीविका बढाई

[1]अर्थात् सुख प्राप्त हुनासाथ उद्दण्डता एवं उग्रताको मार्ग अपनाउँछ तथा भन्दछ कि यसमा अल्लाहको के अनुग्रह । यो त मेरो चतुराईको परिणाम हो या जो ज्ञान तथा गुण मसित छ त्यसका कारण यो सुख-सुविधाहरु प्राप्त भएका छन् अथवा मलाई यो जानकारी थियो कि यी कुराहरु मलाई प्राप्त हुनेछन् किनकि अल्लाहका निकट मेरो धेरै स्थान छ ।

[2]अर्थात् कुरो त्यो होइन जो तिमी बुझिराखेका छौ अथवा बताइराखेका छौ, बरु यो वरदान तिम्रो परीक्षाका लागि हो कि तिमी कृतज्ञता देखाउँछौ अथवा कृतघ्नता ।

[3]यस कुराले कि यो अल्लाहको तर्फबाट मोहलत तथा परीक्षा हो ।

[4]जुनप्रकार कारुनले पनि भनेको थियो परन्तु अन्तत: त्यो आफ्ना कोषहरुसहित भूमिमा धँसाइयो । ما أغنى मा ما, प्रश्नवाची पनि हुनसक्छ तथा नकारात्मक पनि । दुबै प्रकारले सही छ ।

[5]कुकर्मसित अभिप्राय उनका दुष्कर्महरुको प्रतिकार हो । यिनलाई दुष्कर्महरुका सदृश्य हुनुका कारण दुष्कर्म भनिएको छ अन्यथा नराम्रोको प्रतिफल नराम्रो होइन । जस्तै ﴿وَجَزَٰٓؤُا۟ سَيِّئَةٍ سَيِّئَةٌ مِّثْلُهَا﴾ मा छ (फ़तहुल क़दीर)

[6]यो मक्काका काफ़िरहरुलाई चेतावनी छ । तथा यस्तै नै भयो, यिनी पनि विगत जातिहरुको जस्तै अकाल, हत्या तथा कैद आदिका भुक्तभोगी भए । अल्लाहको तर्फबाट आएका यी प्रकोपहरुलाई उनीहरुले रोक्न सकेनन् ।

لِّقَوْمٍ يُؤْمِنُونَ ﴿٥٢﴾

दिन्छ तथा संकुचित (पनि) । ईमानवालाहरुका लागि यसमा ठूला-ठूला निशानीहरु छन् ।[1]

قُلْ يَٰعِبَادِيَ ٱلَّذِينَ أَسْرَفُوا۟ عَلَىٰٓ أَنفُسِهِمْ لَا تَقْنَطُوا۟ مِن رَّحْمَةِ ٱللَّهِ ۚ إِنَّ ٱللَّهَ يَغْفِرُ ٱلذُّنُوبَ جَمِيعًا ۚ إِنَّهُۥ هُوَ ٱلْغَفُورُ ٱلرَّحِيمُ ﴿٥٣﴾

(५३) (मेरो तर्फबाट) भनिदेउ कि हे मेरा भक्तहरु! जसले आफ्ना प्राणहरुमाथि अत्याचार गरेका छन्, तिमी अल्लाहको कृपाबाट निराश नहोउ, निःसन्देह अल्लाह (तआला) समस्त पापहरुलाई क्षमा गरिदिन्छ । वास्तवमा त्यो अत्यन्त क्षमाशील, अत्यन्त कृपालु छ ।[2]

[1]अर्थात् जीविकाका विस्तार एवं संकुचनमा पनि अल्लाहको एकताका प्रमाण छन् अर्थात विदित हुन्छ कि सृष्टिमा मात्र उसैको अधिकार तथा आदेश चल्छ । त्यसको योजना प्रभावी एवं लागू छ । यसकारण त्यो जसलाई चाहन्छ सविस्तार जीविका प्रदान गर्दछ तथा जसलाई चाहन्छ कङ्गाल एवं गरीब बनाएर राख्दछ । त्यसका यस निर्णयमा जो त्यसको हिक्मत (तत्वदर्शिता) एवं इच्छामा निर्भर छ कोही हस्तक्षेप गर्न सक्दैन न त्यसमा परिवर्तन गर्न सक्दछ । तैपनि यी निशानीहरु मात्र अल्लाहवालाहरुकै लागि छन् किनकि तिनै यसमा चिन्तन-मनन गरेर त्यसबाट लाभ प्राप्त गर्दछन् ।

[2]यस आयतमा अल्लाहको क्षमाको विस्तारको वर्णन छ । إسراف (इसराफ) को अर्थ हो पापहरुको अधिकता तथा त्यसमा अति । "अल्लाहको दयाबाट निराश नहोउ" को अर्थ हो कि ईमान भएको अथवा तौबा (क्षमा-याचना) भन्दा पहिला जति पनि पाप गरिएका हुन्छन् मानिस यो नठानोस् कि म त बडो पापी हूँ, मलाई अल्लाहले कसरी क्षमा गर्नेछ ? बरु सच्चा हृदयले यदि ईमानलाई स्वीकार गर्नेछ अथवा शुद्ध क्षमा-याचना गर्नेछ त अल्लाह तआला (परमेश्वर) सबै पापहरुलाई क्षमा गरिदिनेछ । आयतका अवतरणका कारणबाट यही भावार्थ सिद्ध हुन्छ । केही काफिर तथा मुश्रिक (अनेकेश्वरवादी) थिए जसले अधिकताले हत्या एवं व्यभिचार गरेका थिए । यिनी नबी सल्लल्लाहु अलैहि वसल्लमका पासमा आए र भने कि तपाईंको धर्म सही छ परन्तु हामीहरु ठूला पापी हौं । यदि हामीले ईमान स्वीकार गऱ्यौं भने के त्यो सबै क्षमा गरिदिइनेछन् ? त्यसमा यो आयत अवतरित भयो । (सहीह बुख़ारी तफ़सीर सूरः जुमर) यसको अभिप्राय यो होइन कि दया तथा क्षमाको आशामा निकै पाप गर्दैजाउ, त्यसका आदेश तथा अनिवार्य आज्ञाहरुको वास्ता नगर तथा त्यसका नियम तथा सीमाहरुको निश्चिन्त भई उल्लंघन गर । यसप्रकार त्यसका क्रोध तथा प्रतिशोधलाई आमन्त्रण दिएर त्यसको दया एवं क्षमाको आशा राख्नु अति मूर्खता एवं कुविचार हो । यो काँडा छरेर फल खानुको सदृश्य छ । यस्ता मानिसहरुलाई यो याद राख्नुपर्छ कि त्यो जहाँ आफ्ना दासहरुका लागि क्षमाशील छ, त्यहाँ अवज्ञाकारीहरुका लागि عزيز ذوانتقام पनि छ । जस्तो पवित्र कुरआनका अनेक स्थानहरुमा यी दुबै कुराहरुको साथ-साथ

وَاَنِيۡبُوۡۤا اِلٰى رَبِّكُمۡ وَاَسۡلِمُوۡا لَهٗ مِنۡ قَبۡلِ اَنۡ يَّاۡتِيَكُمُ الۡعَذَابُ ثُمَّ لَا تُنۡصَرُوۡنَ ۝٥٤

(५४) तथा तिमी सबै आफ्ना प्रभुतिर नतमस्तक भईहाल तथा त्यसको आज्ञापालन गर्दैजाउ यसभन्दा पूर्व कि तिम्रा निकट प्रकोप आइपुगोस् तथा त्यसपछि तिम्रो साहायता नगरियोस्।

وَاتَّبِعُوۡۤا اَحۡسَنَ مَاۤ اُنۡزِلَ اِلَيۡكُمۡ مِّنۡ رَّبِّكُمۡ مِّنۡ قَبۡلِ اَنۡ يَّاۡتِيَكُمُ الۡعَذَابُ بَغۡتَةً وَّاَنۡتُمۡ لَا تَشۡعُرُوۡنَۙ ۝٥٥

(५५) तथा अनुकरण गर त्यस सर्वोत्तम वस्तुको जो तिमीतिर तिम्रा प्रभुको तर्फबाट अवतरित गरिएको छ, यसभन्दा पूर्व कि तिमीमाथि सहसा प्रकोप आइपुगोस् तथा तिमीलाई सूचना पनि नहोस्।[1]

اَنۡ تَقُوۡلَ نَفۡسٌ يّٰحَسۡرَتٰى عَلٰى مَا فَرَّطْتُّ فِىۡ جَنۡۢبِ اللّٰهِ وَاِنۡ كُنۡتُ لَمِنَ السّٰخِرِيۡنَۙ ۝٥٦

(५६) (यस्तो नहोस् कि) कुनै व्यक्तिले भनोस् कि हाय आफसोच यस कुरामाथि कि मैले अल्लाह (तआला) का पक्षमा आलस्य गरें[2] बरु म उपहास गर्नेहरुमा नै रहें।

اَوۡ تَقُوۡلَ لَوۡ اَنَّ اللّٰهَ هَدٰٮنِىۡ لَكُنۡتُ مِنَ الۡمُتَّقِيۡنَۙ ۝٥٧

(५७) अथवा भनोस् कि यदि अल्लाहले मलाई मार्गदर्शन प्रदान गरेको भए त म पनि संयमीहरुमध्ये हुने थिएँ।[3]

---

वर्णन गरिएको छ, जस्तै ﴿فَلَنْ يُقْبَلَ مِنْ أَحَدِهِمْ مِلْءُ الْأَرْضِ ذَهَبًا وَلَوِ افْتَدَىٰ بِهِ﴾ (अल-हिज्र-४९, ५०) शायद यही कारण छ कि यहाँ आयतको आरम्भ يَا عِبَادِيَ (हे मेरा भक्तहरु !) बाट भन्यो, जसबाट यही विदित हुन्छ कि जसले ईमान स्वीकार गरेर अथवा सच्चा तौबा गरी सही अर्थहरुमा अल्लाहको दास (भक्त) बन्नेछ, त्यसका पाप यदि समुद्रको फिंज (फ्फाग) का बराबर पनि छ भने त्यसले क्षमा गरिदिने छ। त्यो आफ्ना भक्तहरुका लागि निश्चय غفور رحيم (क्षमाशील तथा दयालु) छ। जस्तो हदीसमा सय व्यक्तिहरुका हत्याराको क्षमाको घटना छ। (सहीह बुख़ारी, किताबुल अम्बिया मुस्लिम किताबुत्तौबा)

[1]अर्थात् प्रकोप आउनुभन्दा पूर्व क्षमा-याचना तथा पुण्यकर्मको व्यवस्था गरिहाल किनकि जब प्रकोप आउनेछ त त्यसको ज्ञान तथा बोध पनि तिमीलाई हुनेछैन। यसबाट अभिप्राय सांसारिक प्रकोप हो।

[2]فِي جَنْبِ الله को भावार्थ अल्लाहको आज्ञापालन अर्थात् पवित्र कुर्आन तथा त्यसका अनुसार कर्म गर्नुमा आलस्य हो। अथवा جَنْبٌ को अर्थ निकट तथा छिमेक हो। अर्थात् अल्लाहको समीपता एवं छिमेक (अर्थात् स्वर्ग) खोज्नु तथा चाहनुमा आलस्य गऱ्यो।

[3]यदि अल्लाह मलाई मार्गदर्शन दिइदिन्छ भने म अवज्ञा, शिर्क तथा पापहरुबाट बाँच्थे।

أَوْ تَقُولَ حِينَ تَرَى الْعَذَابَ لَوْ أَنَّ لِي كَرَّةً فَأَكُونَ مِنَ الْمُحْسِنِينَ ﴿٥٨﴾

(५८) अथवा यातनाहरुलाई देखेर भनोस्, काश ! कुनैप्रकार मलाई फर्किनुपर्ने भए त म पनि सदाचारीहरुमध्ये भइहाल्थें ।

بَلَىٰ قَدْ جَاءَتْكَ آيَاتِي فَكَذَّبْتَ بِهَا وَاسْتَكْبَرْتَ وَكُنْتَ مِنَ الْكَافِرِينَ ﴿٥٩﴾

(५९) हो (हो) निःसन्देह तिम्रा निकट मेरा आयतहरु पुगिसकेका थिए जसलाई तिमीले झुठ्लायो तथा अहंकार (एवं गर्व) गर्‍यौ तथा तिमी त थियौ नै काफिरहरुमध्ये ।[1]

وَيَوْمَ الْقِيَامَةِ تَرَى الَّذِينَ كَذَبُوا عَلَى اللَّهِ وُجُوهُهُمْ مُسْوَدَّةٌ ۚ أَلَيْسَ فِي جَهَنَّمَ مَثْوًى لِلْمُتَكَبِّرِينَ ﴿٦٠﴾

(६०) तथा जसले अल्लाहमाथि मिथ्यारोपण गरेका छन् त तपाईंले देख्नुहुनेछ कि केयामतका दिन उनका मुख कालो भइसकेका हुनेछन् ।[2] के अहंकार गर्नेहरुको ठेगाना नरकमा होइन ?[3]

وَيُنَجِّي اللَّهُ الَّذِينَ اتَّقَوْا بِمَفَازَتِهِمْ لَا يَمَسُّهُمُ السُّوءُ وَلَا هُمْ يَحْزَنُونَ ﴿٦١﴾

(६१) तथा जसले संयम गरे उनीहरुलाई अल्लाह (तआ़ला) ले उनलाई सफलताका साथ बचाइहाल्नेछ,[4] उनलाई कुनै दुख स्पर्श पनि गर्न

यो त्यसैप्रकार छ जस्तो अर्को स्थानमा मुशरीकिन (मिश्रणवादीहरु) को कथन उद्धृत गरिएको छ ﴿لَوْ شَاءَ اللَّهُ مَا أَشْرَكْنَا﴾ "यदि अल्लाहले चाहेको भए त हामीले शिर्क गर्दैनथ्यौं" (अल-अनआम-१४८) यिनको यो कथन |كلمة حق أريد بها الباطل| का समान छ । (फ़तहुल क़दीर)

[1]यो अल्लाह तआ़लाले उनको इच्छाको उत्तरमा भन्नेछ ।

[2]जसको कारण यातनाको भयानकता एवं अल्लाहका क्रोधको दर्शन हुनेछ ।

[3]हदीसमा छ 'الْكِبْرُ بَطَرُ الْحَقِّ وغَمْطُ النَّاسِ' "सत्यको इन्कार तथा मानिसहरुलाई हीन ठान्नु अहंकार हो ।" यो प्रश्न सकारात्मक हो अर्थात् अल्लाहका आज्ञा-पालनबाट अभिमान गर्नेहरुको स्थान नरक हो ।

[4]مَفَازَةٌ धातु हो मीमका साथ अर्थात् فوز (सफलता) दुष्कर्मबाट बाँच्नु तथा भलाई एवं सौभाग्य प्राप्त गरिहाल्नु । अभिप्राय यो हो कि अल्लाहले सदाचारीहरुलाई त्यस सफलता तथा सौभाग्यका कारण मुक्ति प्रदान गर्नेछ जो अल्लाहका पासमा उनका लागि पहिल्यैदेखि नै लिखित छ ।

सक्ने छैन तथा उनीहरु न त कुनैप्रकार चिन्तित हुनेछन् ।[1]

ٱللَّهُ خَٰلِقُ كُلِّ شَيْءٍ ۖ وَهُوَ عَلَىٰ كُلِّ شَيْءٍ وَكِيلٌ ﴿٦٢﴾

(६२) अल्लाह समस्त कुराको जन्मदाता हो, तथा त्यही प्रत्येक वस्तुको संरक्षक हो ।[2]

لَّهُۥ مَقَالِيدُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ ۗ وَٱلَّذِينَ كَفَرُوا۟ بِـَٔايَٰتِ ٱللَّهِ أُو۟لَٰٓئِكَ هُمُ ٱلْخَٰسِرُونَ ﴿٦٣﴾

(६३) आकाशहरु तथा धर्तीका साँचोहरुको स्वामी त्यही हो ।[3] ज-जसले अल्लाहका आयतहरुलाई अस्वीकार गरेका छन् ती नै हानि व्यहोर्ने छन् ।[4]

قُلْ أَفَغَيْرَ ٱللَّهِ تَأْمُرُوٓنِّىٓ أَعْبُدُ أَيُّهَا ٱلْجَٰهِلُونَ ﴿٦٤﴾

(६४) (तपाईं) भनिदिनुस् कि हे मूर्खहरु ! के तिमी मसित अल्लाहका अतिरिक्त अरुहरुका इबादतका लागि भन्दछौ ।[5]

وَلَقَدْ أُوحِىَ إِلَيْكَ وَإِلَى ٱلَّذِينَ

(६५) तथा निःसन्देह तिमीतिर पनि तथा तिमीभन्दा पूर्व (का समस्त नबीहरु) तिर पनि प्रकाशना

[1]उनी संसारमा जे-जति छाडेर आएका छन्, त्यसमाथि उनीहरुलाई कुनै शोक हुनेछैन । उनीहरु किनकि केयामतको भयानकताबाट सुरक्षित रहनेछन् । यसकारण उनलाई कुनै कुराको दुख हुनेछैन ।

[2]अर्थात् प्रत्येक वस्तुको विधाता त्यही हो तथा स्वामी पनि त्यही हो । त्यो जस्तो चाहन्छ शासन तथा व्यवस्था गर्दछ । प्रत्येक कुरो उसका अधीन एवं अधिकार मा छ । कसैलाई मुख फर्काउनुको साहस छैन ।

وكيل (वकील) अर्थात् संरक्षक एवं व्यवस्थापक । प्रत्येक कुरो उसलाई समर्पित छ । त्यो बिना कुनै साझेदार उनको रक्षा तथा व्यवस्था गरिराखेको छ ।

[3]مَقَالِيد यो مِقْلَادٌ तथा مِقْلِيد (मिक़्लाद) को बहुवचन हो । (फ़तहुल क़दीर) जसको अर्थ साँचोहरु हुन् । केही ज्ञाताहरुले 'कोष' गरेका छन्, भावार्थ दुबै प्रकार एउटै हो कि सबै विषयको बागडोर उसैको हातमा छ ।

[4]अर्थात् पूरा घाटा, किनकि यस कुफ़्रका दुष्परिणाम स्वरुप उनी नरक़मा गइहाले ।

[5]यो काफ़िरहरुको त्यस (आमन्त्रण) का उत्तरमा छ जो उनीहरु इस्लामका उपदेशक महाआदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई दिने गर्दथे कि आफ्ना पूर्वजहरुको धर्म ग्रहण गरिहालून्, जसमा मूर्तिहरुको पूजा थियो ।

مِنْ قَبْلِكَ ۚ لَئِنْ أَشْرَكْتَ لَيَحْبَطَنَّ عَمَلُكَ وَلَتَكُونَنَّ مِنَ الْخَاسِرِينَ ﴿٦٥﴾

गरिएको छ कि यदि तिमीले शिर्क गऱ्यौ भने निःसन्देह तिम्रो कर्म नष्ट हुनेछ तथा विभिन्न रुपमा हानि व्यहोर्नेहरुमध्ये हुनेछौ ।[1]

بَلِ اللَّهَ فَاعْبُدْ وَكُن مِّنَ الشَّاكِرِينَ ﴿٦٦﴾

(६६) बरु तिमी अल्लाहकै इबादत गर[2] तथा कृतज्ञता गर्नेहरुमध्ये भईहाल ।

وَمَا قَدَرُوا اللَّهَ حَقَّ قَدْرِهِ وَالْأَرْضُ جَمِيعًا قَبْضَتُهُ يَوْمَ الْقِيَامَةِ وَالسَّمَاوَاتُ مَطْوِيَّاتٌ بِيَمِينِهِ

(६७) तथा उनीहरुले जस्तो सम्मान अल्लाहको गर्नुपर्थ्यो गरेनन्,[3] सम्पूर्ण धर्ती केयामतका दिन उसको मुठ्ठीमा हुनेछ तथा समस्त आकाश उसका दायाँ हातमा

[1]"यदि तिमीले शिर्क गऱ्यौ" को अभिप्राय यो हो कि यदि मृत्यु शिर्कको अवस्थामा आयो तथा त्यसबाट तौबा (क्षमा-याचना) गरेनौ । सम्बोधन यद्यपि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमसित छ जो शिर्कबाट पवित्र पनि थिए तथा भविष्यका लागि सुरक्षित पनि । किनकि पैग़म्बर अल्लाहको सुरक्षा एवं संरक्षणमा हुन्छ । उनमा शिर्क हुनुको कुनै सम्भावना थिएन किन्तु यो वास्तवमा अनुयायीहरुतिर संकेत तथा उनलाई बुझाउन उद्देश्य थियो ।

[2]यहाँपनि إِيَّاكَ نَعْبُدُ को जस्तै कर्मकारक الله (अल्लाह) लाई पहिले ल्याएर सीमित गर्नुको अर्थ लिइएको छ कि मात्र एक अल्लाहको उपासना गर ।

[3]किनकि त्यस कुरालाई पनि मानेनन् जो पैग़म्बरहरुद्वारा उनीसम्म पुऱ्याइएको थियो तथा इबादत (आराधना) पनि उसका लागि विशेष गरेनन् बरु अरुहरुलाई पनि त्यसमा सम्मिलित गरिहाले । हदीसमा वर्णित छ कि एउटा यहूदी विद्वान नबी सल्लल्लाहु अलैहि वसल्लमका निकट आयो तथा भन्यो कि हामी अल्लाहका विषयमा (किताबहरु) मा पाउँछौं कि त्यो केयामत (प्रलय) का दिन आकाशहरुलाई एउटा औंलामाथि, भूमिलाई एउटा औंलामाथि, रुखहरुलाई एउटा औंलामाथि, जल तथा आद्रतालाई एउटा औंलामाथि, तथा सबै उत्पत्तिलाई एउटा औंलामाथि राख्नेछ तथा भन्नेछ, म राजा हूँ । उहाँले मुस्कुराएर त्यसको पुष्टि गर्नुभयो तथा आयत وَمَا قَدَرُوا اللهَ को पाठ गर्नुभयो (सहीह बुख़ारी, तफ़सीर सूरः जूमर) । वर्तमान एवं पूर्वज मुस्लिम ज्ञानीहरुको आस्था छ कि जुन सद्‌गुणहरुको वर्णन पवित्र क़ुरआन तथा सहीह हदीसहरुमा छ (जस्तै यस आयतमा हातको तथा हदीसमा औंलाहरुको प्रमाण छ) उनीमाथि बिना उपमा तथा बिना कष्ट कल्पना एवं बिना परिवर्तन ईमान कायम राख्नु अनिवार्य छ । अतः यहाँ वर्णित तथ्यहरुलाई मात्र प्रभुत्व तथा शक्तिका भावमा लिनु सही छैन ।

سُبْحَٰنَهُۥ وَتَعَٰلَىٰ عَمَّا يُشْرِكُونَ ﴿٦٧﴾

बेरिएका हुनेछन् । त्यो पवित्र एवं सर्वोपरि छ । प्रत्येक त्यस वस्तुबाट जसलाई मानिस त्यसका साझीदार बनाउँछन् ।[1]

وَنُفِخَ فِى ٱلصُّورِ فَصَعِقَ مَن فِى ٱلسَّمَٰوَٰتِ وَمَن فِى ٱلْأَرْضِ إِلَّا مَن شَآءَ ٱللَّهُ ۖ ثُمَّ نُفِخَ فِيهِ أُخْرَىٰ فَإِذَا هُمْ قِيَامٌ يَنظُرُونَ ﴿٦٨﴾

(६८) तथा सूर: (नरसिंघा) फुकिनेछ त आकाशहरु तथा धर्तीका सबै अचेत भई लडिहाल्ने छन्[2] परन्तु जसलाई अल्लाह चाहन्छ,[3] अनि पुन: सूर फुकिनेछ त तिनीहरु सहसा उभेर हेर्न थाल्नेछन् ।[4]

وَأَشْرَقَتِ ٱلْأَرْضُ بِنُورِ رَبِّهَا وَوُضِعَ

(६९) तथा धर्ती आफ्ना प्रभुको दिव्य-ज्योतिले जगमगाइ उठ्नेछ,[5] कर्मपत्र प्रस्तुत गरिने

---

[1]यस सन्दर्भमा पनि हदीसमा चर्चित छ कि त्यस पश्चात अल्लाह तआलाले भन्नेछ أنا الملك ، أين ملوك الأرض "म राजा हूँ, धर्तीका राजाहरु कहाँ छन् ।"(उपरोक्त सन्दर्भ)

[2]केही आलिमहरुका निकट نفخة فزع (घबराहटको फूँक) का पश्चात यो दोस्रो फूँक अर्थात نفخة صعق (बेहोशीको फूँक) हुनेछ जसका पश्चात सबै मरिहाल्नेछ । केही ज्ञाताहरुको निकट यो पहिलो फूँक हो । यसैबाट पहिला त अति घबराहटमा हुनेछन् तथा त्यसपछि सबै मर्नेछन् । केही ज्ञाताले यी फूँकहरुको अनुक्रम यसप्रकार वर्णित गरेका छन् । प्रथम नफ़खतुल फना (विलयको फूँक), दोस्रो नफ़खतुल बअस (जीवित हुनुको फूँक), तेस्रो नफ़खतुस्सअक (बिहोसीको फूँक) तथा चौथो नफ़खतुल कयामेले रब्बिल आलमीन (अल्लाह सर्वलोकका पालनकर्ताका लागि उभिने फूँक) (ऐसरुत्तफासीर) केही ज्ञानीका निकट मात्र दुईटा नफ़खहरु हुनेछन् । नफ़खुतल मौत तथा नफखुतल बअ्स तथा केहीका निकट तीन । والله أعلم

[3]अर्थात् अल्लाह जसलाई चाहनेछ उनीहरुलाई मृत्यु आउने छैन, जस्तै जिब्रील, मीकाईल तथा इस्राफ़ील फरिश्ताहरु । केही आलिम भन्दछन् कि रिज़वान फरिश्ता अर्थात् अर्शलाई उचाल्ने फरिश्ताहरु तथा स्वर्ग एवं नरकमा नियुक्त अधिकारी ।

[4]चार नफ़खाहरु (फूँकहरु) का मान्नेवालाहरुका निकट यो चौथो, तीन मान्नेवालाहरुको निकट तेस्रो तथा दुई मान्नेवालाहरुका समीप यो दोस्रो नफ़ख हो । जे पनि होस्, यस फूँकबाट सबै जीवित भई मैदाने महशरमा सर्वलोकका पालनकर्ताका सदनमा उपस्थित हुनेछन् जहाँ लेखाजोखा हुनेछ ।

[5]यस नूर (प्रकाश) बाट केही ज्ञाताहरुले न्याय तथा केहीले आदेश अभिप्राय लिएका छन् । परन्तु यसलाई वास्तविक अर्थमा लिनुमा कुनै वस्तु रुकावट छैन, किनकि अल्लाह आकाशहरु तथा धर्तीको प्रकाश हुन् । (फ़तहुल क़दीर)

الْكِتٰبُ وَجِايْٓءَ بِالنَّبِيّٖنَ وَالشُّهَدَآءِ وَقُضِيَ بَيْنَهُمْ بِالْحَقِّ وَهُمْ لَا يُظْلَمُوْنَ ﴿٦٩﴾

छन्, नबी तथा साक्षीहरुलाई ल्याइनेछ[१] तथा मानिसहरुका बीच न्यायपूर्ण निर्णय गरिनेछन् र उनीहरुमाथि अत्याचार गरिने छैन ।[२]

وَوُفِّيَتْ كُلُّ نَفْسٍ مَّا عَمِلَتْ وَهُوَ اَعْلَمُ بِمَا يَفْعَلُوْنَ ﴿٧٠﴾

(७०) तथा जुन व्यक्तिले जे-जति गरेको छ पूर्णरुपमा दिइनेछ, र जे-जति पनि मानिसहरु गरिराखेका छन्, त्यो राम्ररी जान्दछ ।[३]

وَسِيْقَ الَّذِيْنَ كَفَرُوْٓا اِلٰى جَهَنَّمَ زُمَرًا ۭ حَتّٰٓى اِذَا جَاۗءُوْهَا فُتِحَتْ اَبْوَابُهَا وَقَالَ لَهُمْ خَزَنَتُهَآ اَلَمْ يَاْتِكُمْ رُسُلٌ

(७१) तथा काफ़िरहरुका समूहका समूह नरकतिर पठाइनेछन्,[४] जब उनीहरु त्यसका निकट पुग्नेछन् त्यसका द्वार उनका लागि खोलिनेछन् तथा त्यहाँका रक्षक उनीसित सोध्नेछन् ।

---

[१]नबीहरुसित प्रश्न गरिनेछ कि तिमीले मेरा उपदेश पुऱ्याएका थियौ, अथवा यो सोधिनेछ कि तिम्रा समुदायहरुले तिम्रा आमन्त्रणको के उत्तर दिए, त्यसलाई स्वीकार गरे वा अस्वीकार ? मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको उम्मत (सम्प्रदाय) लाई साक्षीका रुपमा ल्याइनेछ, जो यस कुराको साक्ष्य दिनेछन् कि तिम्रा पैगम्बर (सन्देशवाहकहरु) ले तिम्रो सन्देश आ-आफ्ना जातिहरु अथवा समुदायलाई पुऱ्याएका थिए, जस्तो कि तिमीले पवित्र कुर्आनद्वारा यी कुराहरुबारे सूचित गरेका थियौ ।

[२]अर्थात् कसैका प्रतिफल तथा पुण्यमा कमी हुनेछैन तथा न कसैलाई त्यसका अपराधभन्दा अधिक दण्ड दिइनेछ ।

[३]अर्थात् त्यसलाई कुनै लेखक, मुन्शी तथा साक्षीको आवश्यकता छैन । यो कर्मपत्र एवं साक्षी मात्र तर्कका लागि बहाना हटाउनका लागि हुनेछन् ।

[४](जुमर) زُمَرٌ यो زُمْرٌ (ज़म्र) बाट बनेको हो जसको अर्थ स्वर हो । प्रत्येक गिरोह अथवा समूहमा चर्को स्वर तथा आवाजहरु अवश्य हुन्छन् । यसकारण यो गिरोह तथा समूहका लागि पनि प्रयुक्त हुन्छ । अभिप्राय यो हो कि काफ़िरहरुलाई नरक़तिर समूहहरुमा लगिनेछ, एकका पछि एक गिरोह । यसका अतिरिक्त यिनीहरुलाई पिटेर जनावरहरु सरह धपाइनेछन् । जस्तो अर्को स्थानमा भन्यो ﴿يَوْمَ يُدَعُّوْنَ اِلٰى نَارِ جَهَنَّمَ دَعًّا﴾ (अत्तूर-१३) अर्थात "उनीहरुलाई नरक़तिर कठोरताका साथ धकालिनेछ ।"

[५]अर्थात् उनी पुग्नासाथै तुरुन्त नरक़का सातैवटा द्वार खोलिनेछन् ताकि यातनामा विलम्ब नहोस् ।

مِّنْكُمْ يَتْلُوْنَ عَلَيْكُمْ اٰيٰتِ رَبِّكُمْ وَيُنْذِرُوْنَكُمْ لِقَآءَ يَوْمِكُمْ هٰذَا ؕ قَالُوْا بَلٰى وَلٰكِنْ حَقَّتْ كَلِمَةُ الْعَذَابِ عَلَى الْكٰفِرِيْنَ ۝٧١

कि के तिम्रा निकट तिमीमध्येबाट रसूल (सन्देशवाहक) आएका थिएनन् जो तिमीमाथि तिम्रा प्रभुका आयत पढ्दथे तथा तिमीलाई त्यस दिनको साक्षात्कारबाट सावधान गर्दथे, यिनीहरुले उत्तर दिनेछन् कि हो, किन होइन ![1] परन्तु यातनाको आदेश काफ़िरहरुमाथि सिद्ध भइसक्यो ।[2]

قِيْلَ ادْخُلُوْٓا اَبْوَابَ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَا ۚ فَبِئْسَ مَثْوَى الْمُتَكَبِّرِيْنَ ۝٧٢

(७२) भनिनेछ कि अब नरकका द्वारहरुमा प्रवेश गरिहाल जहाँ उनी सधैं रहनेछन्, अत: आज्ञाकारीहरुको ठेगाना अत्यन्त नराम्रो छ ।

وَسِيْقَ الَّذِيْنَ اتَّقَوْا رَبَّهُمْ اِلَى الْجَنَّةِ زُمَرًا ؕ حَتّٰٓى اِذَا جَآءُوْهَا وَفُتِحَتْ اَبْوَابُهَا وَقَالَ لَهُمْ خَزَنَتُهَا سَلٰمٌ

(७३) तथा जो आफ्ना प्रभुसित तर्सन्थे उनका समूहका समूह स्वर्गतिर पठाइनेछन्[3] यहाँसम्मकि जब उसका निकट आउनेछन् तथा द्वार खोलिदिइनेछन्[4] तथा त्यहाँका

[1]अर्थात् जुनप्रकार संसारमा वाद-विवाद तथा तर्क-वितर्क गर्दथे त्यहाँ सबैथोक आँखाका सामु आउनेछ । वाद-विवादको अवसर नै रहनेछैन । अत: स्वीकार नगरी कुनै उपाय हुनेछैन ।

[2]अर्थात् हामीले पैग़म्बरहरुलाई झुठ्लायौं तथा उनको विरोध गर्‍यौं त्यस दूर्भाग्यका कारण जसका हामी पात्र थियौं, जबकि हामीले सत्यबाट पलायन गरी असत्यलाई अप्नायौं । यस विषयलाई सूर: अल-मुल्क आठदेखि दशसम्मका अधिक स्पष्टताले वर्णन गरिएको छ ।

[3]ईमानवाला तथा संयमी पनि गिरोहहरुका रुपमा स्वर्गतिर लग्नेछन् । पहिला मुकर्रबीन (समीपस्थ) अनि अबरार (सदाचारी) यसैप्रकार क्रमानुसार प्रत्येक गिरोह समान श्रेणीका मानिसहरुमाथि सम्मिलित हुनेछ, जस्तै अम्बिया अम्बियाका साथ, सिद्दीकीन (सत्यवादी) तथा शहीद आफ्जस्ताका साथ तथा विद्वान आफूजस्ता विद्वानका साथ, अर्थात् प्रत्येक प्रकार आफ्नै प्रकार समानका साथ हुनेछ (इब्ने कसीर

[4]हदीसमा वर्णित छ कि स्वर्गका आठ द्वार छन् । उनीहरुमध्ये एकको नाम रैयान हो जसबाट केवल ब्रत बस्नेहरु (रोजेदार) प्रवेश गर्नेछन् । (सहीह बुख़ारी नं.२२५७, मुस्लिम नं. ८०८) । यसैप्रकार अन्य द्वारहरुको पनि नाम हुनेछन्, जस्तै नमाज़को द्वार, दानको द्वार, जिहाद (धर्मयुद्ध) को द्वार आदि (सहीह बुख़ारी, किताबुस सेयाम, मुस्लिम-किताबुज़ ज़कात) द्वारको चौडाइ ४० वर्षको दूरीका बराबर हुनेछ, तैपनि तिनीहरु भरिएका हुनेछन् । (सहीह मुस्लिम किताबुज़ ज़ोहद) सबभन्दा पहिला स्वर्गको ढोका घच्घच्याउने नबी सल्लल्लाहु अलैहि

عَلَيْكُمْ طِبْتُمْ فَادْخُلُوهَا خٰلِدِينَ ۝٧٣

रक्षक उनीसित भन्नेछन् कि तिमीमाथि सलाम होस्, तिमी प्रसन्न रह ! तसर्थ तिमी यिनमा सधैंका लागि गइहाल ।

وَقَالُوا الْحَمْدُ لِلّٰهِ الَّذِي صَدَقَنَا وَعْدَهُ وَأَوْرَثَنَا الْأَرْضَ نَتَبَوَّأُ مِنَ الْجَنَّةِ حَيْثُ نَشَاءُ فَنِعْمَ أَجْرُ الْعٰمِلِينَ ۝٧٤

(७४) यिनीहरु भन्नेछन् कि अल्लाहको धन्य छ जसले आफ्नो वचन पूरा गऱ्यो तथा हामीलाई यस धर्तीको उत्तराधिकारी बनाइदियो कि स्वर्गमा जहाँ चाहन्छन् निवास गरौं, त सत्कर्म गर्नेहरुको कति उत्तम प्रतिफल छ ?

وَتَرَى الْمَلٰٓئِكَةَ حَآفِّينَ مِنْ حَوْلِ الْعَرْشِ يُسَبِّحُونَ بِحَمْدِ رَبِّهِمْ وَقُضِيَ بَيْنَهُمْ بِالْحَقِّ وَقِيلَ الْحَمْدُ لِلّٰهِ رَبِّ الْعٰلَمِينَ ۝٧٥

(७५) तथा तिमीले फरिश्ताहरुलाई अल्लाहका अर्शका चारैतिर चक्र बनाइ आफ्ना प्रभुको प्रशंसा तथा तस्बीह गर्दै देख्नेछौ,[1] तथा उनीहरुमा न्यायपूर्ण निर्णय गरिनेछ तथा भनिदिइनेछ कि समस्त प्रशंसाहरु अल्लाहकै

वसल्लम हुनुहनेछ । (मुस्लिम किताबुल ईमान, बाबु अना अव्वलुन नासे यशफऊ) स्वर्गमा सर्वप्रथम प्रवेश गर्ने गिरोहका अनुहार पूर्णिमाको चाँदका समान तथा अरु गिरोहका आकाशमा प्रकाशमान ताराहरुमध्ये अति प्रकाशमान ताराहरुका समान चम्किराखेका हुनेछन् । स्वर्गमा उनी मल-मूत्र तथा थूक एवं कफबाट पवित्र हुनेछन् । उनका काइंयोहरु सुनको तथा पसिना कस्तूरी हुनेछ । उनका मकल (आगो वाल्ने भाँडो) हरुमा सुगन्धित काठ हुनेछ । उनका पत्नीहरु हूरे ईन (ठूला आँखा भएका) हुनेछन् । उनको आकार आदमका समान साट्ठी हातको हुनेछ । (सहीह बुख़ारी अव्वलो किताबिल अम्बिया) सहीह बुख़ारीका एक वर्णनमा छ कि प्रत्येक ईमान भएकालाई दुई पत्नीहरु हुनेछन् । उनको शोभा एवं सौन्दर्यको यो स्थिति हुनेछ कि उनकी पिंडुलीको गुदी मासुका पछाडीबाट देखिनेछ । (किताबु बदइल ख़ल्क बाबु मा जाअ फी सिफ्तील जन्नते) केही ज्ञाताहरुले भनेका छन् कि यी दुई पत्नीहरु हूरहरुका अतिरिक्त संसारका नारीहरुमध्ये हुनेछन् । परन्तु ७२ हूरहरु भएको वर्णन प्रमाणानुसार सही छैन, यसकारण प्रत्यक्षत: यही कुरो सही छ कि प्रत्येक स्वर्गवासीको हूरहरु समेत कमसेकम दुई पत्नीहरु हुनेछन् । तैपनि وَلَهُمْ فِيهَا مَا يَشْتَهُونَ का अर्न्तगत अधिक पनि सम्भव छन् । والله أعلم (अधिक जानकारीका लागि हेर्नुस् फ़तहुल बारी उक्त अध्याय)

[1]अल्लाहका निर्णयका पश्चात जब ईमान भएकाहरु स्वर्गमा तथा काफ़िर एवं मुश्रिक नरकमा गइहाल्नेछन् । आयतमा त्यसका पछिको चित्रण गरिएको छ कि फरिश्ताहरु अल्लाहका अर्श (आसन) लाई घेरि अल्लाहको प्रशंसा एवं पवित्रतागानमा लीन हुनेछन् ।

लागि छन् जो सर्वलोकको पालनकर्ता हो ।[1]

## सूरतुल मोमिन-४०

سُوْرَةُ الْمُؤْمِن

सूरः मोमिन* मक्कामा उत्रेको तथा यसमा पच्चासी आयतहरु एवं नौ रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुभारम्भ गर्दछु अल्लाहको नामबाट जो अत्यन्त दयालु एवं कृपालु छ ।

حٰمٓ ۝١

(१) हा. मीम. ।

تَنْزِيْلُ الْكِتٰبِ مِنَ اللّٰهِ الْعَزِيْزِ الْعَلِيْمِ ۝٢

(२) यस किताबलाई अवतरण गर्नु[2] त्यस अल्लाहको तर्फबाट छ जो प्रभावशाली एवं सर्वज्ञाता छ ।

غَافِرِ الذَّنْۢبِ وَقَابِلِ التَّوْبِ

(३) पापहरुलाई क्षमा गर्नेवाला तथा क्षमा-याचनालाई स्वीकार गर्नेवाला[4] घोर यातनावाला[5]

---

[1]यहाँ प्रशंसालाई कुनै एउटा वस्तुसित सम्बन्धित गरिएको छैन जसबाट विदित हुन्छ कि प्रत्येक वस्तु (जो बोल्दछ वा बोल्दैन) का मुखमा अल्लाहको महिमागान हुनेछन् ।

*यस सूरःलाई सूरतुल ग़ाफिर तथा सूरतुत्तौल पनि भन्दछन् ।

[2]वा تنزيل अर्थमा छ مُنَزَّل का, अर्थात् अल्लाहका तर्फबाट अवतरित छ जसमा झूठ छैन ।

[3]जो प्रभुत्वशाली छ । त्यसको शक्ति तथा प्रभुत्वका अगाडी कसैको केही चल्दैन । عليم (ज्ञानी) छ, त्यसमा कुनै कणसम्म गुप्त छैन चाहे त्यो कति नै स्थूल पर्दामा लुकेको होस् ।

[4]पूर्वका पापहरुलाई क्षमा-गर्नेवाला तथा आगामी हुने आलस्यमा तौबा (क्षमा-याचना) स्वीकार गर्नेवाला छ । अथवा आफ्ना मित्रहरुका पाप क्षमा गर्नेवाला तथा काफ़िर एवं मुशिरक यदि क्षमा माँगदछन् भने उनको क्षमा स्वीकार गर्नेवाला छ ।

[5]उनका लागि जो आख़िरतमाथि संसारलाई महत्व दिन्छन् तथा दुष्टता एवं उद्दण्डताको मार्ग अपनाउँछन् । यो अल्लाहका यस कथनको जस्तै छ ।

﴿ نَبِّئْ عِبَادِيْٓ أَنِّيْٓ أَنَا الْغَفُوْرُ الرَّحِيْمُ ۝ وَأَنَّ عَذَابِيْ هُوَ الْعَذَابُ الْأَلِيْمُ ﴾

شَدِيدِ الْعِقَابِ ذِي الطَّوْلِ ۖ لَا إِلَٰهَ إِلَّا هُوَ ۖ إِلَيْهِ الْمَصِيرُ ③

उपकार एवं सामर्थ्यवाला,[1] जसका अतिरिक्त कोही उपास्य छैन । उसैतिर फर्कनुछ ।

مَا يُجَادِلُ فِي آيَاتِ اللَّهِ إِلَّا الَّذِينَ كَفَرُوا فَلَا يَغْرُرْكَ تَقَلُّبُهُمْ فِي الْبِلَادِ ④

(४) अल्लाह (तआला) का आयतहरुमा ती मानिस झगडा गर्छन् जो काफ़िर छन्[2] त ती मानिसहरुको नगरहरुमा हिंड्डुल गर्नु तपाईंलाई धोखामा न पारिदेओस् ।[3]

---

"मेरा दासहरुलाई भनिदेउ कि म क्षमाशील दयानिधि हूँ तथा मेरो दण्ड पनि अति दुखदायी छ ।" (अल-हिज्र-४९,५०)

पवित्र कुर्‌आनमा अधिकांश स्थानमा यी दुवै गुण साथ-साथ वर्णित गरिएका छन् ताकि मानिस भय तथा आशाका बीच रहोस्, किनकि मात्र भय मानिसलाई अल्लाहको दया एवं क्षमाबाट निराश गर्न सक्दछ तथा केवल आशा पापहरुमा उत्साहित गरिदिन्छ ।

[1] طَـوْلٌ को अर्थ वैभव तथा विस्तार हो अर्थात त्यही वैभव एवं धन प्रदान गर्नेवाला छ । केही जानकारहरु भन्दछन् कि यसको अर्थ पुरस्कार तथा उपकार हो, अर्थात् आफ्ना दासहरुमाथि उपकार तथा उनीहरुलाई पुरस्कृत गर्नेवाला छ ।

[2] यस झगडासित अभिप्राय अनुचित तथा व्यर्थको झगडा हो जसको उद्देश्य सत्यलाई झुठ्लाउनु तथा त्यसको खण्डन हो । अन्यथा जुन तर्क-वितर्क (बहस) को उद्देश्य सत्यको स्पष्टीकरण असत्यको खण्डन तथा विरोधी एवं आलोचना गर्नेहरुका शंकाको निवारण हो, त्यो निन्दनीय होइन अति प्रशंसनीय तथा उत्तम छ । विद्वानहरुलाई त त्यसका लागि जोड दिएको छ,

﴿لَتُبَيِّنُنَّهُ لِلنَّاسِ وَلَا تَكْتُمُونَهُ﴾

"तिमी मानिसहरुका सामु यसको अवश्य वर्णन गर तथा यसलाई नलुकाउनु ।" (आले-इमरान-१८७)

अल्लाहद्वारा अवतरित गरिएको किताबका तर्फ एवं प्रमाणहरुलाई लुकाउनु यति घोर अपराध हो कि त्यसमाथि विश्वको प्रत्येक वस्तु धिक्कार गर्दछ । (अल-बकर:-१५९)

[3] अर्थात् यी काफ़िर एवं मुश्रिक जो व्यापार गर्दछन् तथा त्यसका लागि विभिन्न नगरहरुमा आवत-जावत एवं ठूलो लाभ प्राप्त गर्छन्, यिनी आफ्ना कुफ्र (अविश्वास) का कारण शीघ्र नै अल्लाहको पकडमा आउनेछन् । यिनी अवसर दिइराखेका छन् किन्तु उनलाई बेकार छाडिने छैनन् ।

كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوحٍ وَالْأَحْزَابُ مِنْ بَعْدِهِمْ وَهَمَّتْ كُلُّ أُمَّةٍ بِرَسُولِهِمْ لِيَأْخُذُوهُ وَجَادَلُوا بِالْبَاطِلِ لِيُدْحِضُوا بِهِ الْحَقَّ فَأَخَذْتُهُمْ فَكَيْفَ كَانَ عِقَابِ ۝٥

(५) उनीभन्दा पूर्व नूहका समुदायले तथा उनका पश्चातका अन्य समुदायले पनि झुठ्लाएका थिए, तथा प्रत्येक समुदायले आफ्ना रसूललाई बन्दी बनाउन विचार गरे[1] तथा असत्यका माध्यमले हठधर्मी गऱ्यो ताकि उनीबाट सत्यलाई नाश गरिदेऊन्[2] अनि मैले उनलाई समातिहालें, त मेरो तर्फबाट कस्तो दण्ड भयो ।[3]

وَكَذَٰلِكَ حَقَّتْ كَلِمَتُ رَبِّكَ عَلَى الَّذِينَ كَفَرُوا أَنَّهُمْ أَصْحَابُ النَّارِ ۝٦

(६) तथा यसैप्रकार तपाईंका प्रभुका आदेश काफिरहरुमाथि सिद्ध भयो कि उनी नरकवासी हुन् ।[4]

الَّذِينَ يَحْمِلُونَ الْعَرْشَ وَمَنْ حَوْلَهُ يُسَبِّحُونَ بِحَمْدِ رَبِّهِمْ وَيُؤْمِنُونَ بِهِ وَيَسْتَغْفِرُونَ لِلَّذِينَ آمَنُوا رَبَّنَا وَسِعْتَ كُلَّ شَيْءٍ رَحْمَةً وَعِلْمًا

(७) अर्शलाई उचाल्ने तथा त्यसका आस-पासका फरिश्ताहरु आफ्ना प्रभुको महिमागान् प्रशंसाका साथ-साथ गर्दछन् तथा त्यसमाथि ईमान स्वीकार गर्दछन् तथा ईमानवालाहरुका लागि क्षमा-याचना गर्दछन्; (भन्दछन्) कि हे हाम्रा प्रभु तिमीले प्रत्येक वस्तुलाई आफ्नो दया तथा ज्ञानबाट



[1]ताकि उसलाई बन्दी अथवा हत गरिदेऊन् अथवा दण्ड देऊन् ।

[2]अर्थात् आफ्ना रसूलहरुसित उनीहरुले झगडा गरे जसको आशय सत्यमा त्रुटि निकाल्नु तथा त्यसलाई निर्बल पार्नु थियो ।

[3]त मैले यी अनृतका पक्षपातीहरुलाई आफ्ना प्रकोपका पकडमा लिइहालें अनि तिमी देखिहाल कि उसका लागि मेरो प्रकोप कुन प्रकार आयो, कसरी उनीहरुलाई गलत अक्षर जस्तै मेटाइयो अथवा उनलाई शिक्षाको प्रतीक बनाइयो ।

[4]यसबाट उद्देश्य यस कुरोको स्पष्टीकरण गर्नु हो कि जस्तो विगत समुदायहरुमाथि तिम्रा प्रभुको प्रकोप सिद्ध भयो तथा नाश गरिए, यदि यी मक्काका नागरिक पनि तिनलाई झुठ्लाउन तथा विरोध गर्नबाट रोकिएनन् तथा असत्य विवादलाई छोडेनन् भने यिनी पनि यसैप्रकार अल्लाहका प्रकोपमा समातिनेछन्, अनि कोही यिनीहरुलाई बचाउनेवाला हुनेछैन ।

فَاغْفِرْ لِلَّذِينَ تَابُوا وَاتَّبَعُوا سَبِيلَكَ وَقِهِمْ عَذَابَ الْجَحِيمِ ⑦

घेरको छौ, तिमी उनलाई क्षमा गरिदेउ जो क्षमा माँग्दछ तथा तिम्रा मार्गको अनुसरण गर्दछन् तथा तिमी उनलाई नरक्को यातनाबाट पनि सुरक्षित राख ।[1]

رَبَّنَا وَأَدْخِلْهُمْ جَنَّٰتِ عَدْنٍ الَّتِي وَعَدتَّهُمْ وَمَن صَلَحَ مِنْ آبَائِهِمْ وَأَزْوَاجِهِمْ وَذُرِّيَّاتِهِمْ ۚ إِنَّكَ أَنتَ الْعَزِيزُ الْحَكِيمُ ⑧

(८) हे हाम्रा प्रभु ! तिमी उनीहरुलाई नित्य रहने स्वर्गमा लैजाउ, जसको तिमीले वचन दिएका छौ, तथा उनका पूर्वज तथा पत्नी एवं सन्तानहरु मध्येबाट (पनि) ती सबैलाई जो सदाचारी छन् ।[2] वस्तुतः तिमी प्रभावशाली एवं तत्वज्ञ छौ ।

وَقِهِمُ السَّيِّئَاتِ ۚ وَمَن تَقِ السَّيِّئَاتِ

(९) तथा उनीहरुलाई कुकर्मबाट पनि सुरक्षित राख,[3] (सत्य त यो हो कि) त्यस दिन तिमीले जसलाई

[1]यसमा निकटता प्राप्त फरिश्ताहरुको एउटा विशेष समूहको चर्चा छ तथा उनी जे-जति गर्दछन्, त्यसको स्पष्टीकरण छ । यी त्यसता फरिश्ता हुन् जो अर्श उचाल्नेवाला हुन् । तथा उनी फरिश्ताहरु हुन् जो अर्शका चारैतिर छन् । उनको एउटा काम यो हो कि उनी अल्लाहको तस्बीह तथा पवित्रतागान गर्दछन्, अर्थात् दोषहरुबाट त्यसको स्वच्छता तथा उनका लागि गुणहरु एवं निपुणताको सिद्धि तथा त्यसका सामु विवशता तथा विनम्रता (ईमान) को प्रर्दशन गर्दछन् । अर्को काम उनको यो हो कि ईमान भएकाहरुका लागि क्षमाको प्रार्थना गर्दछन् । भनिन्छ कि अर्श उचाल्ने फरिश्ता चार छन् किन्तु प्रलयका दिन उनको संख्या आठ हुनेछ । (इब्ने कसीर)

[2]अर्थात् यी सबैलाई स्वर्गमा एकत्रित गरिदेउ ताकि एक-अर्कालाई देखेर उनीहरु प्रसन्न होऊन् । यस विषयलाई अर्को स्थानमा यसप्रकार वर्णन गरिएको छ :

﴿وَالَّذِينَ آمَنُوا وَاتَّبَعَتْهُمْ ذُرِّيَّتُهُم بِإِيمَانٍ أَلْحَقْنَا بِهِمْ ذُرِّيَّتَهُمْ وَمَا أَلَتْنَاهُم مِّنْ عَمَلِهِم مِّن شَيْءٍ﴾

"ती मानिस जो ईमान स्वीकार गरे तथा तिनैका अनुगमन उनका सन्तानले ईमानका साथ गरे । हामीले उनका साथ उनको सन्तानलाई मिलाइदियौं तथा हामीले उनका कर्महरुमध्ये केही कम गरेनौं ।" (सूरःअत्तूर-२१)

अर्थात् सबैलाई स्वर्गमा यसप्रकार समान श्रेणी दियौं कि तल्लोलाई पनि उच्चको पद प्रदान गरिदियौं । यो गरेनौं कि उच्च पदमा कमी गरेर उनीहरुलाई तल्लो स्थानमा ल्यायौं बरु तल्लोलाई उचालेर उच्च गरिदियौं तथा त्यसका कर्मको कमीलाई आफ्नो कथा तथा दयाले पूरा गरिदियौं ।

[3]यहाँ سيئات बाट अभिप्राय यातनाहरु हुन्, अथवा उत्तर लुप्त छ, अर्थात् उनलाई आखिरत (परलोक) को यातनाहरुबाट अथवा नराम्रा कुराहरुका प्रतिकारबाट बचाउनु ।

يَوْمَئِذٍ فَقَدْ رَحِمْتَهُ ۚ وَذَٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيمُ ⑨

कुकर्महरु (अशुभ) बाट बचाइहाल्यो त्यसमाथि तिमीले दया गऱ्यौ, तथा सबभन्दा ठूलो सफलता त यही हो ।[1]

إِنَّ الَّذِينَ كَفَرُوا يُنَادَوْنَ لَمَقْتُ اللَّهِ أَكْبَرُ مِن مَّقْتِكُمْ أَنفُسَكُمْ إِذْ تُدْعَوْنَ إِلَى الْإِيمَانِ فَتَكْفُرُونَ ⑩

(१०) नि:सन्देह जसले कुफ्र गरे उनीहरुलाई यो आवाज दिइनेछ कि निश्चय अल्लाहको तिमीमाथि क्रोधित हुनु त्यसभन्दा निकै अधिक छ, जो तिमी क्रोधित हुने गर्थ्यौ आफ्ना मनले जब ईमानतिर बोलाइन्थ्यो, अनि कुफ्र गर्न थाल्थ्यौ ।[2]

قَالُوا رَبَّنَا أَمَتَّنَا اثْنَتَيْنِ وَأَحْيَيْتَنَا اثْنَتَيْنِ فَاعْتَرَفْنَا بِذُنُوبِنَا فَهَلْ

(११) (उनीहरु) भन्नेछन् कि हे हाम्रा प्रभु ! तिमीले हामीलाई दुई पटक माऱ्यौ तथा दुईपटक नै जीवित गऱ्यौ[3] अब हामी आफ्ना पापहरुलाई स्वीकार

[1]अर्थात् आख़िरत (प्रलय) को यातनाबाट बचिहाल्नु तथा स्वर्गमा प्रवेश पाउनु यही ठूलो सफलता हो किनकि यस जस्तो सफलता कुनै छैन तथा यसका समतुल्य कुनै मोक्ष छैन । यी आयतहरुमा ईमानवालाहरुका लागि दुई शुभ-सूचनाहरु छन्, एक त यो कि फरिश्ताहरु उनका लागि परोक्ष रुपले प्रार्थना गर्दछन् जसको हदीसमा प्रधानता आएको छ । दोस्रो यो कि ईमान भएकाहरुका परिवार स्वर्गमा एकत्रित हुनेछन् ।"अल्लाह हामीलाई उनीहरुमध्ये गरिदेओस् जसलाई उनका पुनीत पूर्वजहरुका साथ मिलाइनेछ ।"

[2]مَقْتٌ (मुक्त) घोर अपराधलाई भन्दछन् । नरकवासी स्वयंलाई नरक़मा पोलिंदा देखेर अधिक क्रोधित हुनेछन् । त्यस समय उनीसित भनिनेछ कि संसारमा जब तिमीलाई ईमानको आमन्त्रण दिइन्थ्यो तथा तिमी इन्कार गर्दथ्यौ त अल्लाह तआला यसभन्दा कैयन् अधिक तिमीमाथि क्रोधित हुन्थ्यो जति आज तिमी स्वयं आफूमाथि क्रोधित भइराखेका छौ । यो अल्लाहका त्यस क्रोधकै परिणाम हो कि आज तिमी नरक़मा छौ ।

[3]बहुसंख्यक भाष्यकारहरुको व्याख्याका अनुसार दुई मृतहरुमध्ये प्रथम मृत्यु त त्यही वीर्य हो जो पिताको पिठ्यूँमा हुन्छ अर्थात त्यसका अस्तित्वभन्दा पूर्व त्यसका नास्तित्वलाई मृत्यु भनिन्छ, तथा दोस्रो मृत्यु त्यो हो जब मानिस जीवन बिताएर प्राप्त गर्दछ जस पश्चात समाधिमा गाडिन्छ । दुई जीवनहरुमध्ये प्रथम यो सांसारिक जीवन हो जसको आरम्भ जन्मबाट तथा अन्त्य निधनमा हुन्छ । तथा दोस्रो जीवन त्यो हो जो प्रलयका दिन चिहानहरुबाट उठ्नुका पश्चात प्राप्त हुनेछ । यिनै दुई मृत्युहरु तथा दुई जीवनहरुको चर्चा ﴿وَكُنتُمْ أَمْوَاتًا فَأَحْيَاكُمْ ثُمَّ يُمِيتُكُمْ ثُمَّ يُحْيِيكُمْ﴾ (अल-बक़र:-२८) मा गरिएको छ ।

إِلَىٰ خُرُوجٍ مِّن سَبِيلٍ ⑪

गर्दछन्[१] त के अब कुनै मार्ग निस्कनुको पनि छ ?[२]

ذَٰلِكُم بِأَنَّهُۥٓ إِذَا دُعِىَ ٱللَّهُ وَحْدَهُۥ كَفَرْتُمْ ۖ وَإِن يُشْرَكْ بِهِۦ تُؤْمِنُوا۟ ۚ فَٱلْحُكْمُ لِلَّهِ ٱلْعَلِىِّ ٱلْكَبِيرِ ⑫

(१२) यो (यातना) तिमीलाई यसकारण छ कि जब तिमी एक्लो अल्लाहतिर बोलाइन्थ्यो त तिमीले अस्वीकार गरिदिन्थ्यौ, तथा यदि उसका साथ कसैलाई सम्मिलित गरिन्थ्यो त तिमीले स्वीकार गरिहाल्थ्यौ ।[३] त अब निर्णय अल्लाह सर्वोपरि एवं महानकै छ ।[४]

هُوَ ٱلَّذِى يُرِيكُمْ ءَايَٰتِهِۦ وَيُنَزِّلُ لَكُم مِّنَ ٱلسَّمَآءِ رِزْقًا ۚ وَمَا يَتَذَكَّرُ إِلَّا مَن يُنِيبُ ⑬

(१३) त्यही हो जो तिमीलाई आफ्ना निशानीहरु (चिन्ह) देखाउँछ तथा तिम्रा लागि आकाशबाट जीविका उतार्दछ ।[५] शिक्षा त तिनै ग्रहण गर्दछन् जो (अल्लाहतिर) झुक्दछन् ।[६]

[१]अर्थात् नर्कमा स्वीकार गर्नेछन्, जहाँ स्वीकारको कुनै लाभ हुनेछैन तथा त्यहाँ लज्जित हुनेछन् जहाँ पश्चातापको कुनै मुल्य हुनेछैन ।

[२]यो त्यही इच्छा हो जसको चर्चा पवित्र कुर्आनका अनेक स्थानमा गरिएको छ कि हामीलाई पूरा संसारमा पठाइयोस् ताकि हामी पुण्यका कर्म गरेर आऔं ।

[३]यो उनका नरकबाट निकाल्न नजान्नुका कारण भनिएको छ कि तिमी संसारमा अल्लाहको तौहीद (एकता) लाई इन्कार गर्दथ्यौ तथा शिर्क तिमीलाई रुचिकर थियो । अत: अब नरकको स्थाई यातनाका सिवाय तिम्रा लागि केही छैन ।

[४]त्यसै एक अल्लाहको आदेश छ कि अब तिम्रा लागि नरकको यातना सदाका लागि छ तथा त्यसबाट उम्कनका लागि कुनै मार्ग छैन ।

[५]अर्थात् पानी जो तिम्रो जीविकाको माध्यम हो । यहाँ अल्लाह तआलाले निशानीहरुका प्रकट गर्नुलाई जीविका उतार्नुका साथ मिलाइदिएको छ । यसकारण कि सामर्थ्यहरुका चिन्हहरुलाई देखाउनु धर्महरुको मूल हो तथा अजीविकाहरु शरीरहरुका मूल हुन् । यसप्रकार यहाँ दुबै आधारहरुलाई एकत्र गरिदिएको छ । (फतहुल क़दीर)

[६]अल्लाहका आज्ञापालनतिर जसबाट उनका हृदयहरुमा आख़िरत (परलोक) को भय जागृत हुन्छ तथा अल्लाहका आदेशहरु तथा अनिवार्य कर्तव्यहरुको पालन गर्दछन् ।

فَادْعُوا اللَّهَ مُخْلِصِينَ لَهُ الدِّينَ وَلَوْ كَرِهَ الْكَافِرُونَ ⑭

(१४) तिमी अल्लाहलाई पुकार्दैरह त्यसका लागि धर्मलाई विशुद्ध गरेर यद्यपि काफ़िर नराम्रो मान्दछन् ।[1]

رَفِيعُ الدَّرَجَاتِ ذُو الْعَرْشِ يُلْقِي الرُّوحَ مِنْ أَمْرِهِ عَلَىٰ مَنْ يَشَاءُ مِنْ عِبَادِهِ لِيُنْذِرَ يَوْمَ التَّلَاقِ ⑮

(१५) उच्च पदहरुवाला अर्शको स्वामी; त्यो आफ्ना दासहरुमध्ये जसमाथि चाहन्छ प्रकाशना अवतरित गर्दछ[2] ताकि त्यो भेटका दिन (साक्षात्कार) का दिनसित तर्साऊन् ।

يَوْمَ هُمْ بَارِزُونَ ۖ لَا يَخْفَىٰ عَلَى اللَّهِ مِنْهُمْ شَيْءٌ ۚ لِمَنِ الْمُلْكُ الْيَوْمَ ۖ لِلَّهِ الْوَاحِدِ الْقَهَّارِ ⑯

(१६) जुन दिन (सबै) मानिस प्रकट हुनेछन्,[3] उनको कुनै कुरा अल्लाहबाट लुकेको रहने छैन । आज कसको राज्य छ ?[4] मात्र अल्लाह एक एवं प्रभुत्वशालीको ।[5]

الْيَوْمَ تُجْزَىٰ كُلُّ نَفْسٍ بِمَا كَسَبَتْ ۚ

(१७) आज प्रत्येक प्राणलाई त्यसको करणीको फल दिइनेछ, आज (कुनै प्रकारका)

---

[1]अर्थात् जब सबैथोक अल्लाह एक्लोले नै गर्नेवाला छ त काफ़िरहरुलाई जति नराम्रो लागे केवल उसै एक अल्लाहलाई पुकार उसका लागि इबादत तथा आज्ञापालनलाई विशुद्ध गर्दै ।

[2]روح (आत्मा) सित अभिप्राय प्रकाशना (वह्य) हो जो भक्तहरुमध्ये कसैलाई रिसालत (ईशदूतत्व) का लागि चैन गरी अवतरित गर्दछ । प्रकाशना (वह्य) लाई रुह (आत्मा) यसकारण भनिएको छ कि जुनप्रकार रुहमा मानव-जीवनका अस्तित्व एवं सुरक्षाको भेद लुकेको छ, त्यसैप्रकार वह्यबाट पनि ती मानवीय हृदयहरुमा जीवनको लहर दगुर्न थाल्छ जो पहिला कुफ्र तथा शिर्कका कारण मृत हुन्छन् ।

[3]अर्थात् जीवित भई चिहानहरुबाट बाहिर निस्कि उभिनेछन् ।

[4]यो केयामतका दिन अल्लाह तआला (परमेश्वर) ले सोध्नेछ जब सबै मानिस त्यसका सामु महशरका मैदान (एकत्र हुने स्थान) मा उभिनेछन् । अल्लाह तआला धर्तीलाई आफ्नो मुट्ठी तथा आकाशलाई आफ्ना दायाँ हातमा बेर्नेछ तथा भन्नेछ, "राजा म हूँ, धर्तीका राजा कहाँ छन् ?" (सहीह बुख़ारी, सूरः जुमर)

[5]जब कोही बोल्ने छैन त यो उत्तर अल्लाह तआलाले स्वयं दिनेछ । केही विद्वानहरु भन्छन् कि अल्लाहका आदेशानुसार एउटा फरिश्ताले घोषणा गर्नेछ जसका साथै सबै काफ़िर तथा एक स्वरमा यही उत्तर दिनेछन् । (फ़तहुल क़दीर)

لَا ظُلْمَ الْيَوْمَ ۭ اِنَّ اللّٰهَ سَرِيْعُ الْحِسَابِ ⑰

अत्याचार छैन, निःसन्देह अल्लाह (तआ़ला) अति शीघ्र हिसाब गर्नेवाला छ ।[1]

وَاَنْذِرْهُمْ يَوْمَ الْاٰزِفَةِ اِذِ الْقُلُوْبُ لَدَى الْحَنَاجِرِ كٰظِمِيْنَ ۥ مَا لِلظّٰلِمِيْنَ مِنْ حَمِيْمٍ وَّلَا شَفِيْعٍ يُّطَاعُ ⑱

(१८) तथा उनीहरुलाई अति निकट आउनु[2] (केयामत) सित सावधान गरिदिनुस् जबकि मुटु घाँटीसम्म पुग्नेछन् तथा सबै शान्त (चूप) हुनेछन् ।[3] अत्याचारीहरुको न कोही संरक्षक मित्र हुनेछ न कोही सिफारिश गर्नेवाला कि जसको कुरा मानिनेछ ।

يَعْلَمُ خَآئِنَةَ الْاَعْيُنِ وَمَا تُخْفِى الصُّدُوْرُ ⑲

(१९) त्यो आँखाहरुको बेइमानीलाई तथा छातिका गुप्त कुराहरु (राम्ररी) जान्दछ ।[4]

وَاللّٰهُ يَقْضِىْ بِالْحَقِّ ۭ وَالَّذِيْنَ يَدْعُوْنَ مِنْ دُوْنِهٖ لَا يَقْضُوْنَ بِشَىْءٍ ۭ

(२०) तथा अल्लाह (तआ़ला) ठीक-ठाक निर्णय गरिदिनेछ, र त्यसका अतिरिक्त जसलाई यिनीहरु पुकार्दछन्, तिनीहरु कुनै कुराको पनि निर्णय

---

[1]यसकारण कि त्यसलाई दासहरुको जस्तो सोच-विचारको आवश्यकता हुनेछैन ।

[2]آزِفَة (आज़िफ़ः) को अर्थ हो समीप आउनेवाली । यो क़्यामत (प्रलय) को नाम हो, यसकारण कि त्यो पनि समीप आउनेवाली छ ।

[3]त्यसदिन भयका कारण हृदय आफ्ना स्थानबाट हट्नेछन् كاظِمِين (काज़िमीन) अर्थात् शोकले भरिएका अथवा रोइरहेका, वा चूप, यसका यी तीनवटा अर्थ गरिएका छन् ।

[4]यसमा अल्लाह तआ़लाका पूर्ण ज्ञानको वर्णन छ कि उसलाई सबै वस्तुहरुको ज्ञान छ, सानो होस् अथवा ठूलो, सूक्ष्म होस् अथवा स्थूल, उच्च श्रेणीको होस् अथवा निम्न श्रेणीको । यसकारण मानिसलाई चाहिन्छ कि त्यसका ज्ञान तथा सर्वज्ञाताको यो स्थिति छ त त्यसको अवज्ञाबाट बचोस् तथा सही अर्थहरुमा त्यसको भय आफूभित्र पैदा गरोस् । आँखाको बेईमानी चोरीले हेर्नु, जस्तै बाटो हिंड्दा कुनै सुन्दरीलाई छड्के नज़रले हेर्नु । छातिका कुरामा ती शंसय पनि आउँछन् जो मानिसका मनमा पैदा भइरहन्छन् । ती जबसम्म शंसय नै रहन्छन् अर्थात् एक क्षणका लागि आउने-जाने गर्दछन् तबसम्म त तिनी पकडमा योग्य हुनेछैनन् किन्तु तिनी जब संकल्पको रुप धारण गर्दछन् त उनीमाथि पकड हुनसक्छ, चाहे तिनलाई गर्नुको अवसर गर्दछन् त उनीमाथि पकड हुनसक्छ, चाहे तिनलाई गर्नुको अवसर मानिसलाई प्राप्त होस् अथवा नहोस् ।

إِنَّ اللَّهَ هُوَ السَّمِيعُ الْبَصِيرُ ﴿٢٠﴾

गर्न सक्दैनन्[1] वस्तुत: अल्लाह तआ़ला राम्ररी सुन्नेवाला तथा राम्ररी देख्नेवाला छ।

أَوَلَمْ يَسِيرُوا فِي الْأَرْضِ فَيَنظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِينَ كَانُوا مِن قَبْلِهِمْ ۚ كَانُوا هُمْ أَشَدَّ مِنْهُمْ قُوَّةً وَآثَارًا فِي الْأَرْضِ فَأَخَذَهُمُ اللَّهُ بِذُنُوبِهِمْ وَمَا كَانَ لَهُم مِّنَ اللَّهِ مِن وَاقٍ ﴿٢١﴾

(२१) के यिनीहरु धर्तीमा हिंड्डुल गरेनन् कि देख्दथे कि जो मानिस यिनीभन्दा पूर्व थिए उनको परिणाम कस्तो भयो ? उनी शक्ति एवं बल तथा धर्तीमा आफ्ना स्मृतिहरुका आधारमा यिनीहरुको अपेक्षा अत्याधिक थिए, तैपनि अल्लाहले उनलाई उनका पापहरुका कारण समातिहाल्यो, तथा कोही भएन जो उनलाई अल्लाहका यातनाहरुबाट बचाउन सक्दथे।[2]

ذَٰلِكَ بِأَنَّهُمْ كَانَت تَّأْتِيهِمْ رُسُلُهُم بِالْبَيِّنَاتِ فَكَفَرُوا فَأَخَذَهُمُ اللَّهُ ۚ

(२२) यो यसकारण कि उनका पासमा उनका पैग़म्बर चमत्कार लिई आउँथे त उनीहरु अस्वीकार गरिदिन्थे,[3] त अल्लाहले उनीहरुलाई समाति

[1]यसकारण कि उनीहरुलाई कुनै वस्तुको न ज्ञान छ न सामर्थ्य, उनीहरु निश्चेत पनि छन् तथा असमर्थ पनि, जबकि निर्णयका लागि ज्ञान तथा अधिकार दुबैको आवश्यकता छ तथा ती दुबै गुण मात्र अल्लाहसित छ। अत: मात्र उसैलाई यो अधिकार छ कि त्यो निर्णय गरोस् तथा उसले वस्तुत: सत्यका साथ निर्णय गर्नेछ किनकि न उसलाई कसैको भय हुनेछ न कसैबाट अभिलाषा तथा लोभ।

[2]विगत आयतहरुमा आख़िरत (परलोक) का स्थितिहरुको वर्णन थियो । अब उनीहरुलाई संसारका स्थितिहरुसित सावधान गरिदैछ कि यी मानिस अलि धर्तीमा हिंड्डुल गरी ती जातिहरुको परिणाम हेरुन् जो यिनीभन्दा पहिला यस अपराधमा नाश गरिए, जबकि विगत जातिहरु शक्ति एवं स्मृतिहरुमा यिनीभन्दा कैयन् वढी थिए। परन्तु जब उनीमाथि अल्लाहको प्रकोप आयो त उनीहरुलाई कसैले वचाउन सकेन। यसैप्रकार तिमीमाथि पनि प्रकोप आउन सक्छ तथा यदि यो आइहाल्यो भने तिम्रो कोही संरक्षक तथा सहायक हुनेछैन।

[3]यो उनका विनाशका कारणको वर्णन हो, जो छ अल्लाहका आयतहरुको इन्कार तथा पैग़म्बरहरुलाई झुठ्लाउनु। अब नबूअत तथा रिसालत (दूतत्व) को क्रम समाप्त भइहालेको छ तैपनि विश्व एवं प्राणीहरुमा अल्लाहका असंख्य निशानीहरु छरिएर रहेका छन्। यसका अतिरिक्त शिक्षा-दीक्षा तथा आमन्त्रण एवं उपदेशद्वारा विद्वान एवं सत्यका प्रचारक उनका स्पष्टीकरण तथा चिन्ह बताउनका

إِنَّهُۥ قَوِيٌّ شَدِيدُ ٱلْعِقَابِ ﴿٢٢﴾

हाल्थ्यो । नि:सन्देह त्यो अत्यन्त शक्तिशाली तथा कठोर यातनाहरु भएको छ ।

وَلَقَدْ أَرْسَلْنَا مُوسَىٰ بِـَٔايَٰتِنَا وَسُلْطَٰنٍ مُّبِينٍ ﴿٢٣﴾

(२३) तथा हामीले मूसा (अलैहिस्सलाम) लाई आफ्ना आयत (चिन्हहरु) तथा स्पष्ट प्रमाणहरुका साथ पठायौं ।[1]

إِلَىٰ فِرْعَوْنَ وَهَٰمَٰنَ وَقَٰرُونَ فَقَالُوا۟ سَٰحِرٌ كَذَّابٌ ﴿٢٤﴾

(२४) फिर्औन तथा हामान एवं कारुनतिर त उनीहरुले भने कि (यो त) जादूगर एवं झूठा छ ।[2]

فَلَمَّا جَآءَهُم بِٱلْحَقِّ مِنْ عِندِنَا قَالُوا۟

(२५) त जब उनका पासमा (मूसा) (अलैहिस्सलाम) हाम्रो तर्फबाट सत्य (धर्म) लिएर आए त

लागि विद्यमान छन् । अत: आज पनि जो अल्लाहका आयतहरुबाट मुख फर्काउनेछन् तथा धर्म एवं धर्मविधानबाट विमुख हुनेछन्, त्यसको दुष्परिणाम रिसालतलाई इन्कार गर्नेहरु तथा झुठ्लाउनेहरुबाट भिन्न हुनेछैन ।

[1]आयतबाट अभिप्राय ती नौवटा निशानी छन् जसको वर्णन पहिला गरिसकिएको छ, अथवा लट्ठी तथा ज्योतिर्मय हात भएका दुई ठूला खुला चमत्कार छन् । سُلطان مبين सित अभिप्राय शक्तिशाली प्रमाण तथा खुला दलिलहरु (तर्क) छन् जसको कुनै उत्तर संभव थिएन । अट्टेरीपना तथा निर्लज्जता बाहेक ।

[2]फिर्औन मिश्र (इजिप्ट) का निवासी किब्त नामक जातिका राजा थियो, बडो क्रुर तथा निर्दयी तथा महापालनकर्ता हुनुको दावेदार । उसले आदरणीय मूसाको जातिलाई दास बनाएर राखेको थियो तथा उनीमाथि अनेक प्रकारका अत्याचार गर्दथ्यो, जस्तो कि कुर्आनका अनेक स्थानहरुमा त्यसको विवरण छ । हामान, फिर्औनको मन्त्री र विशेष परामर्शदाता थियो तथा कारुन समयको ठूलो धनी पुरुष थियो । ती सबैले पहिलाका मानिसको जस्तो ईशदूत मूसालाई झुठ्लाए तथा उनलाई जादूगर एवं मिथ्यावादी भने । जस्तो अर्को स्थानमा भनियो :

﴿ كَذَٰلِكَ مَآ أَتَى ٱلَّذِينَ مِن قَبْلِهِم مِّن رَّسُولٍ إِلَّا قَالُوا۟ سَاحِرٌ أَوْ مَجْنُونٌ ۞ أَتَوَاصَوْا۟ بِهِۦ ۚ بَلْ هُمْ قَوْمٌ طَاغُونَ ﴾

अर्थात् "यसैप्रकार जो मानिस उनीभन्दा पूर्व गुज्रेका छन्, उनका पासमा जो पनि सन्देशवाहक आयो उनीहरुले भनिदिए कि यो जादूगर हो अथवा पागल हो । के यिनी त्यस कुराको एक-अर्कालाई वसीयत गर्दैआएका छन् ? होइन, बरु यी सबै सीमा उल्लंघन गर्नेवाला हुन् ।" (अज़्ज़ारियात-५२, ५३)

اقْتُلُوٓا أَبْنَآءَ الَّذِينَ ءَامَنُوا مَعَهُۥ وَاسْتَحْيُوا نِسَآءَهُمْ ۚ وَمَا كَيْدُ الْكَٰفِرِينَ إِلَّا فِى ضَلَٰلٍ ﴿٢٥﴾

उनीहरुले भने कि यसका साथ जो ईमानवाला छन् उनका पुत्रहरुलाई त मारिहाल एवं पुत्रीहरुलाई जीवित राख ।[1] तथा काफिरहरुको जो बहाना छ त्यो त्रुटिमा नै छ ।[2]

وَقَالَ فِرْعَوْنُ ذَرُونِىٓ أَقْتُلْ مُوسَىٰ وَلْيَدْعُ رَبَّهُۥٓ ۖ إِنِّىٓ أَخَافُ أَن يُبَدِّلَ دِينَكُمْ أَوْ أَن يُظْهِرَ فِى الْأَرْضِ الْفَسَادَ ﴿٢٦﴾

(२६) तथा फिर्औनले भने कि मलाई छोड कि म मूसालाई मारिहालूँ[3] तथा यसलाई चाहियो कि आफ्ना प्रभुलाई पुकारोस्,[4] मलाई त डर छ कि यो कहीं तिम्रो धर्म न बदलिदेओस् अथवा देशमा कुनै बहुत ठूलो उपद्रव न उत्पन्न गरिदेओस् ।[5]

---

[1]फिर्औन यो काम पहिला नै गरिराखेको थियो ताकि त्यो शिशु पैदा नै नहोस् जो ज्योतिषिहरुको भविष्यवाणीका अनुसार त्यसका राज्यका लागि खतरा हुनसक्थ्यो । यो दोस्रो पटक आदेश उसले आदरणीय मूसाका अपमान एवं अवहेलनाको लागि दियो तथा यसकारण पनि कि मूसाको जाति इस्राईलको सन्तान मूसालाई आफ्ना लागि विपदा एवं अशुभ ठानोस्, जस्तो कि वास्तवमा उनले भने, ﴿أُوذِينَا مِن قَبْلِ أَن تَأْتِيَنَا وَمِنۢ بَعْدِ مَا جِئْتَنَا﴾ "हे मूसा, तिमी आउनुभन्दा पूर्व पनि हामी यातनामा रहयौं तथा तिमी पश्चात पनि, हाम्रो यही दशा छ ।" (अल-आराफ़-१२९)

[2]अर्थात् त्यसबाट त्यो लक्ष्य प्राप्त गर्न चाहन्थ्यो कि इस्राईलको सन्तानको शक्तिमा अधिकतर तथा उसको मनमा कमी नहोस्, यो त्यसलाई प्राप्त भएन बरु अल्लाहले फिर्औन तथा त्यसैको जातिलाई नै डुबाइदियो तथा इस्राईलको सन्तानलाई शुभ भूमिको स्वामी बनाइदियो ।

[3]यो संभवत: फिर्औनले ती मानिसहरुसित भन्यो जो उसलाई मूसा अलैहिस्सलामको हत्यावाट रोक्दथे ।

[4]यो फिर्औनको अभिमानको प्रदर्शन हो कि म हेर्नेछु उसको प्रभु उसलाई कसरी बचाउँछ, त्यसलाई पुकारेर हेरोस् । अथवा प्रभुकै इन्कार हो कि उसको कुनचाहिं प्रभु छ जो बचाउनेछ, किनकि त्यो प्रभु त स्वयं नै हुनसक्थ्यो ।

[5]अर्थात् अल्लाहका अतिरिक्त अन्यको इबादतबाट हटाएर अल्लाहको इबादत तथा उपासनामा नलगाइदेओस् अथवा त्यसका कारण उपद्रव न उत्पन्न होस् । अभिप्राय यो थियो कि यदि त्यसको कुरा मेरो जातिबाट केही मानिसहरुले मानिहाले त जो मान्दैनन् उनीसित तर्क-वितर्क गर्नेछन्, जससित उनका बीच लडाई-झगडा हुनेछ जो उपद्रवको कारण बन्नेछ । यसप्रकार तौहीद

وَقَالَ مُوسَىٰٓ إِنِّي عُذْتُ بِرَبِّي وَرَبِّكُم مِّن كُلِّ مُتَكَبِّرٍ لَّا يُؤْمِنُ بِيَوْمِ الْحِسَابِ ﴿٢٧﴾

(२७) तथा मूसा (अलैहिस्सलाम) ले भनें कि म आफ्नो तथा तिम्रा प्रभुको शरणमा आउँछु प्रत्येक त्यस अहङ्कारी व्यक्ति (को नराम्रो कुरो) बाट जो हिसाब (लेखाजोखा) का दिनमा विश्वासका दिनमाथि ईमान स्वीकार गर्दैनन् ।[1]

وَقَالَ رَجُلٌ مُّؤْمِنٌ مِّنْ آلِ فِرْعَوْنَ يَكْتُمُ إِيمَانَهُ أَتَقْتُلُونَ رَجُلًا أَن يَقُولَ رَبِّيَ اللَّهُ وَقَدْ جَاءَكُم بِالْبَيِّنَاتِ مِن رَّبِّكُمْ ۖ وَإِن يَكُ كَاذِبًا فَعَلَيْهِ كَذِبُهُ ۖ وَإِن يَكُ صَادِقًا يُصِبْكُم بَعْضُ الَّذِي يَعِدُكُمْ ۖ إِنَّ اللَّهَ لَا يَهْدِي مَنْ هُوَ مُسْرِفٌ كَذَّابٌ ﴿٢٨﴾

(२८) तथा एउटा ईमान भएका व्यक्तिले जो फिर्‌औनका परिवारमध्ये थियो तथा आफ्नो ईमान लुकाएको थियो, भन्यो कि के तिमी एउटा व्यक्तिको मात्र यस कुरामा हत्या गर्दछौ कि त्यो भन्दछ कि मेरो प्रभु अल्लाह हो तथा तिम्रा प्रभुका तर्फबाट स्पष्ट प्रमाण लिएर आएको छ, यदि त्यो भूठो छ भने त्यसको भूठ उसैमाथि छ तथा यदि साँचो छ भने त्यो जुन (यातनाहरु) को तिमीलाई वचन दिइराखेको छ त्यसमध्येबाट कुनै त कुनै तिमीमाथि आइपर्नेछ ।[3] अल्लाह (तआला)

(एकेश्वरवाद) का आमन्त्रणलाई उनले उपद्रवको कारण बनायो जबकि उपद्रवी त्यो स्वयं थियो, किनकि अल्लाहको अतिरिक्त अन्यको उपासना नै उपद्रवको मूल कारण हो ।

[1]ईशदूत मूसा अलैहिस्सलामलाई जब यो थाहा भयो कि फिर्‌औन मलाई हत गरिदिन चाहन्छ त उनले त्यसको नराम्रो कुराबाट बच्नका लागि अल्लाहसित प्रार्थना गरे । नबी सल्लल्लाहु अलैहि वसल्लम जब शत्रुबाट भय हुन्थ्यो त यो दुआ (प्रार्थना) गर्नुहुन्थ्यो । «اللَّهُمَّ إِنَّا نَجْعَلُكَ فِي نُحُورِهِمْ وَنَعُوذُ بِكَ مِنْ شُرُورِهِمْ»

"हे अल्लाह ! हामी तिमीलाई उनका मुकाबिलामा गर्दछौं तथा उनको उद्दण्डताबाट तिम्रो शरण चाहन्छौं ।" (मुसनद अहमद ४/४१५)

[2]अर्थात् यो अल्लाह प्रभु हुने कुरोमा यसै ईमान स्वीकार गर्दैन बरु त्यसका पासमा आफ्ना यस सिद्धान्तका स्पष्ट प्रमाण छन् ।

[3]यो उसले न्यूनताका रुपमा भन्यो कि यदि तिमी त्यसका प्रमाणहरुसित सन्तुष्ट छैनौ तथा त्यसको दावत (आमन्त्रण) तथा त्यसको सत्यता तिमीमाथि स्पष्ट भएन तैपनि समझ-बुझ तथा सतर्कताको कुरो यही छ कि त्यसलाई त्यसको अवस्थामा छाडिदिइयोस् तथा त्यसलाई छेडछाड नगरियोस् । यदि त्यो भूठा छ भने अल्लाह

उनलाई मार्गदर्शन गर्दैन जो सीमा उल्लंघन गर्ने तथा झूठा हुन्छन् ।[1]

(२९) हे मेरा समुदायका मानिसहरु ! आज त राज तिम्रो छ कि यस धर्तीमा तिमी प्रभावशाली छौ[2] परन्तु यदि अल्लाह (तआला) को प्रकोप हामीमाथि आइहाल्यो, त कसले हाम्रो सहायता गर्नेछ ?[3] फ़िर्औनले भन्यो कि म त तिमीलाई त्यही सल्लाह दिइराखेको छु जो स्वयं देखिराखेको छु तथा म त तिमीलाई भलाईको मार्ग नै भनिराखेको छु ।[4]

يٰقَوْمِ لَكُمُ الْمُلْكُ الْيَوْمَ ظٰهِرِيْنَ فِي الْاَرْضِ ۡ فَمَنْ يَّنْصُرُنَا مِنْۢ بَاْسِ اللّٰهِ اِنْ جَآءَنَا ؕ قَالَ فِرْعَوْنُ مَآ اُرِيْكُمْ اِلَّا مَآ اَرٰى وَمَآ اَهْدِيْكُمْ اِلَّا سَبِيْلَ الرَّشَادِ ﴿٢٩﴾

(३०) तथा त्यस ईमान भएकाले भन्यो कि हे मेरा समुदायका मानिसहरु ! मलाई त भय छ कि तिमी

وَقَالَ الَّذِيْٓ اٰمَنَ يٰقَوْمِ اِنِّيْٓ اَخَافُ

तआ़ला स्वयं नै त्यसलाई यस झूठको प्रतिफल संसार तथा परलोकमा दिइहाल्नेछ । तथा यदि त्यो साँचो छ तथा तिमीले त्यसलाई यातनाहरु दियौ भने निश्चय त्यो तिमीलाई जुन प्रकोपहरुबाट तर्साउँछ, तिमीहरुमाथि उनीमध्ये कुनै प्रकोप आउन सक्छ ।

[1]यसको अभिप्राय यो हो कि यदि त्यो झूठा भएको भए (जस्तो कि तिमी विश्वास दिलाउँछौ) त अल्लाहले त्यसलाई प्रमाण तथा चमत्कारहरुबाट सुशोभित गर्दैनथ्यो, जबकि त्यसका पासमा यी कुराहरु मौजूद छन् । दोस्रो अभिप्राय हो कि यदि त्यो झूठा छ भने अल्लाह तआ़लाले स्वयं नै त्यसलाई अपमानित तथा त्यसको सत्यानाश गरिदिनेछ । तिमीलाई त्यसका विरोधमा केही गर्नुको आवश्यकता छैन ।

[2]अर्थात् यो अल्लाहको तिमीमाथि उपकार हो कि तिमीलाई धर्तीमा अधिपत्य प्रदान गरेको छ । त्यसको कृतज्ञता देखाउ तथा त्यसका सन्देष्टालाई झुठ्लाएर अल्लाहको क्रोध न किन ।

[3]यी सैनिक तथा फौजी तिम्रा कुनै काम आउने छैनन्, न अल्लाहका प्रकोपलाई नै हटाउन सक्नेछन् यदि त्यो आइहाल्यो । यहाँसम्म त्यस ईमान भएकाको कथन थियो जो ईमान लुकाएको थियो ।

[4]फ़िर्औनले आफ्ना वैभव तथा प्रतापका कारण झूठो बोल्यो तथा भन्यो कि म जे देखिराखेको छु त्यही तिमीलाई भनिराखेको छु तथा मैले भनेको मार्ग नै सही छ, जबकि यस्तो थिएन ।﴿وما أمر فرعون برشيد﴾ (सूरः हूद-९७)

عَلَيْكُمْ مِّثْلَ يَوْمِ الْأَحْزَابِ ۝

माथि पनि त्यस्तै दिन (यातना) नआओस् जो अन्य समुदायहरुमाथि आयो ।

مِثْلَ دَأْبِ قَوْمِ نُوحٍ وَعَادٍ وَثَمُودَ وَالَّذِينَ مِنْ بَعْدِهِمْ ۚ وَمَا اللَّهُ يُرِيدُ ظُلْمًا لِّلْعِبَادِ ۝

(३१) जस्तै नूहका सम्प्रदाय तथा आद एवं समूद तथा उनका पश्चातवालाहरुको (दशा भयो) ।[1] तथा अल्लाह आफ्ना दासहरुमाथि कुनै प्रकारको अत्याचार गर्न चाहँदैनन् ।[2]

وَيَا قَوْمِ إِنِّي أَخَافُ عَلَيْكُمْ يَوْمَ التَّنَادِ ۝

(३२) तथा हे मेरो जातिका मानिसहरु ! मलाई त तिमीमाथि हाँक पुकारका दिनको पनि भय छ ।[3]

يَوْمَ تُوَلُّونَ مُدْبِرِينَ مَا لَكُم مِّنَ اللَّهِ مِنْ عَاصِمٍ ۗ وَمَن يُضْلِلِ اللَّهُ فَمَا لَهُ مِنْ هَادٍ ۝

(३३) जुन दिन तिमी पिठ्यूँ फर्काइ फर्कनेछौ,[4] तिमीलाई अल्लाहबाट बचाउनेवाला कोही हुनेछैन; तथा जसलाई अल्लाहले विचलित गर्दछ त्यसको मार्गदर्शक कोही छैन ।[5]

[1]यो कुरा त्यस ईमानवाला व्यक्तिले बुझायो तथा आफ्ना समुदायलाई पुन: तर्सायो कि यदि अल्लाहका रसूललाई झूठ्लाउनमा हामी अडिरहयौं भने खतरा छ कि विगत समुदायहरुको जस्तो अल्लाहका प्रकोपमा पकडमा आइहाल्नेछन् ।

[2]अर्थात् अल्लाहले जसलाई पनि नाश गऱ्यो उनका पापहरुको बदलामा तथा रसूलहरुलाई झुठ्लाउन तथा उनका विरोधका कारण नै गऱ्यो । अन्यथा त्यो करुणाकारी दयालु प्रभु आफ्ना दासहरुमाथि अत्याचारको विचार नै गर्दैन । सम्प्रदायहरुको विनाश प्रतिकारका नियमको अनिवार्य परिणाम हो जसबाट कुनै समुदाय अथवा व्यक्ति अलग छैन ।

[3]تَنَادي (तनादी) को अर्थ एक-अर्कालाई पुकार्नु हो । केयामतलाई يَومَ التناد (पुकार्नुको दिन) यसकारण भनिएको छ कि त्यस दिन एक-अर्कालाई पुकार्नेछन् । स्वर्गवासी नरकवासीहरुलाई तथा नरकवासी स्वर्गवासीहरुलाई पुकार्नेछन् । (अल-आराफ-४८, ४९) केही विद्वानहरु भन्छन् कि मीज़ान (कर्मपत्रका तराजू) का निकट एउटा फरिश्ता हुनेछ । जसका नेकीहरु (पुण्यका कर्महरु) को पलरा हलुङ्गो हुनेछ । त्यसका दूर्भाग्यको घोषणा त्यो फरिश्ता ठूलो स्वरमा गर्नेछ । केही विद्वानहरु भन्दछन् कि कर्महरुका अनुसार मानिसहरुलाई पुकारिनेछ । जस्तै स्वर्गवासीहरुलाई, हे स्वर्गवासीहरु ! तथा नरकवासीहरुलाई हे नरकवासीहरु ! इब्ने कसीर भन्नुहुन्छ कि इमाम बग़वीको यो कथन निकै राम्रो छ कि यी सबै कुराहरुकै कारण यो नाम राखिएको छ ।

[4]अर्थात् موقف (मौक़िफ़-मैदाने महशर) बाट नरकतिर जानेछौ अथवा हिसाबका पश्चात त्यहाँबाट भाग्नेछौ ।

[5]जो त्यसलाई सन्मार्ग देखाउन सकोस् अर्थात् त्यसमा हिंडाउन सकोस् ।

(३४) तथा त्यसभन्दा पूर्व तिम्रा पासमा यूसुफ निशानीहरु लिएर आए[1] तैपनि तिमी उनीबाट ल्याइएका निशानीहरुमा शंका एवं सन्देह नै गरिरहयौ,[2] यहाँसम्मकि जब उनको मृत्यु भइहाल्यो[3] त तिमी भन्नलाग्यौ कि यिनका पश्चात त अल्लाह कुनै रसूललाई पठाउने नै छैन,[4] यसैप्रकार अल्लाह विचलित गर्दछ प्रत्येक त्यस व्यक्तिलाई जो सीमा उल्लंघन गर्नेवाला तथा शंका एवं सन्देह गर्नेवाला हुन्छ ।[5]

وَلَقَدْ جَآءَكُمْ يُوسُفُ مِن قَبْلُ بِٱلْبَيِّنَٰتِ فَمَا زِلْتُمْ فِى شَكٍّ مِّمَّا جَآءَكُم بِهِۦ ۖ حَتَّىٰٓ إِذَا هَلَكَ قُلْتُمْ لَن يَبْعَثَ ٱللَّهُ مِنۢ بَعْدِهِۦ رَسُولًا ۚ كَذَٰلِكَ يُضِلُّ ٱللَّهُ مَنْ هُوَ مُسْرِفٌ مُّرْتَابٌ ﴿٣٤﴾

(३५) जो बिना कुनै प्रमाणको जो उनको पासमा आएको छ अल्लाहका आयतहरुको विषयमा विवाद गर्दछन्,[6] अल्लाहका निकट एवं ईमानवालाहरुका निकट

ٱلَّذِينَ يُجَٰدِلُونَ فِىٓ ءَايَٰتِ ٱللَّهِ بِغَيْرِ سُلْطَٰنٍ أَتَىٰهُمْ ۖ كَبُرَ مَقْتًا

[1]अर्थात् हे मिश्रका निवासीहरु ईशदूत मूसाभन्दा पहिला यसै क्षेत्रमा जसमा तिमी बसिराखेका छौ, ईशदूत यूसुफ पनि प्रमाणहरु तथा तर्कहरुका साथ आएका थिए जसमा तिम्रा पूर्वजहरुलाई ईमानको आमन्त्रण दिइएको थियो । अर्थात् جاءكم (तिम्रो पासमा आए) सित तात्पर्य جاء إلى آبائكم (तिम्रा पूर्वजहरुका पासमा आए) हुन् ।

[2]किन्तु तिमीले त्यसमा पनि ईमान स्वीकार गरेनौ तथा उनका आमन्त्रणमा शंका तथा सन्देह गरिरहयौ ।

[3]अर्थात् ईशदूत अलैहिस्सलामको निधन भइहाल्यो ।

[4]तिम्रो रीति प्रत्येक पैगम्बरलाई झुठ्लाउन तथा उनको विरोध गर्न रहिआएको छ । यसकारण ठान्दथे कि अब कोही रसूल आउने छैन । भावार्थ यो हो कि रसूल आउनु अथवा नआउनु तिम्रा लागि समान छ । अथवा यो अभिप्राय हो कि अब यस्तो पुरुषोत्तम कहाँ पैदा हुनसक्छ जो रिसालत (दूतत्व) बाट सम्मानित होस् । मानौं आदरणीय यूसुफका निधनका पश्चात उनको महत्वको इकरार (स्वीकार) थियो, तथा धेरै मानिसहरु प्रत्येक महत्वपूर्ण मानिसका पश्चात यही भन्दछन् ।

[5]अर्थात् त्यस खुल्ला पथ-भ्रष्टताका समान जसमा तिमी फँसेका छौ, अल्लाह तआला प्रत्येक त्यस व्यक्तिलाई पनि कुमार्ग गर्दछ जो निकै अधिक पाप गर्दछ तथा अल्लाहका धर्म, त्यसको तौहीद (एकेश्वरवाद) तथा त्यसका वचन एवं धम्कीहरुमा सन्देह गर्दछ ।

[6]अल्लाहको तर्फबाट अवतरित कुनै प्रमाण त्यसको पासमा छैन । यसका उपरान्त पनि अल्लाहको तौहीद एवं त्यसका आदेशहरुमा विवाद गर्दछन्, जस्तो कि प्रत्येक युगमा अन्धविश्वासीहरुको आचरण रहेको छ ।

عِندَ اللَّهِ وَعِندَ الَّذِينَ آمَنُوا ۚ كَذَٰلِكَ يَطْبَعُ اللَّهُ عَلَىٰ كُلِّ قَلْبِ مُتَكَبِّرٍ جَبَّارٍ ﴿٣٥﴾

यो त अत्याधिक प्रसन्नताको कुरो हो । अल्लाह (तआला) यसैप्रकार प्रत्येक अहङ्कारी, अवज्ञा गर्ने व्यक्तिका हृदयमा मोहर लगाइदिन्छन् ।[२]

وَقَالَ فِرْعَوْنُ يَا هَامَانُ ابْنِ لِي صَرْحًا لَّعَلِّي أَبْلُغُ الْأَسْبَابَ ﴿٣٦﴾

(३६) तथा फिर्औनले भने कि हे हामान, मेरा लागि एउटा उच्च अट्टारी (महल) बनाउ[३] सम्भवत: म ती द्वारहरुसम्म पुगिहालूँ ।

أَسْبَابَ السَّمَاوَاتِ فَأَطَّلِعَ إِلَىٰ إِلَٰهِ مُوسَىٰ وَإِنِّي لَأَظُنُّهُ كَاذِبًا ۚ وَكَذَٰلِكَ زُيِّنَ لِفِرْعَوْنَ سُوءُ عَمَلِهِ وَصُدَّ عَنِ السَّبِيلِ ۚ وَمَا كَيْدُ فِرْعَوْنَ إِلَّا فِي تَبَابٍ ﴿٣٧﴾

(३७) जो आकाशका द्वार छन् तथा मूसाका उपास्य (ईश्वर) लाई चियाउन सकूँ[४] तथा मलाई त पूरा विश्वास छ कि त्यो झूठा छ,[५] तथा यसैप्रकार फिर्औनका कुकर्म उसलाई राम्रा देखाइए[६] तथा मार्गबाट रोकियो,[७] तथा फिर्औनको (प्रत्येक) षड्यन्त्र विनाशमा नै रहयो ।[८]

---

[१]अर्थात् उनका दूराचारसित अल्लाह तआला नै अप्रसन्न हुँदैन बरु ईमानवाला पनि यसलाई अत्यन्त अप्रिय ठान्दछन् ।

[२]अर्थात् जुनप्रकार यी विवाद गर्नेहरुका हृदयमा मोहर (मुद्रा) लगाइयो त्यसैप्रकार प्रत्येक त्यस व्यक्तिका हृदयका मोहर लगाइन्छ जो अल्लाहका आयतहरुको तुलनामा अभिमान तथा उद्दण्डता देखाउँछ, जसका पश्चात उनीहरुलाई कुकर्म, तथा नराम्रो कुरो देखिदैन ।

[३]यो फिर्औनको उद्दण्डताको वर्णन हो । जसले आफ्ना मन्त्री हामानलाई एउटा उच्च भवन निर्माण गर्नुको आदेश दियो ताकि त्यसद्वारा त्यो आकाशका द्वारहरुसम्म पुग्न सकोस् । أسباب (अस्बाब) को अर्थ द्वार अथवा मार्ग हो । विवरणका लागि हेर्नुस् (अल-कसम-२८)

[४]अर्थात् हेरुँ कि आकाशमा वास्तवमा कोही पूज्य छ ?

[५]यस कुरामा कि आकाशमा अल्लाह छ जो आकाशहरु तथा रचयिता तथा तिनका व्यवस्थापक हो अथवा यस कुरामा कि त्यो अल्लाहको रसूल हो ।

[६]अर्थात् शैतानले उसलाई यसप्रकार पथभ्रष्ट गरेर राख्यो तथा त्यसका कुकर्म उसलाई राम्रा देखिरहन्थे ।

[७]अर्थात् सत्य तथा सही मार्गबाट त्यसलाई रोकियो तथा त्यो पथ-भ्रष्टताको भूल-भूलैयामा भौंतारिदै रहयो ।

[८]تَبَـاب (तबाब, क्षति, विनाश), अर्थात् जो उपाय गऱ्यो त्यसको परिणाम त्यसका पक्षमा

وَقَالَ الَّذِىٓ اٰمَنَ يٰقَوْمِ اتَّبِعُوْنِ اَهْدِكُمْ سَبِيْلَ الرَّشَادِ ﴿٣٨﴾

(३८) तथा त्यस ईमान भएको व्यक्तिले भन्यो कि हे मेरा समुदाय (का मानिसहरु) ! तिमी (सबै) मेरो अनुगमन गर, म पुण्यका मार्गतिर तिम्रो मार्गदर्शन गर्नेछु ।[१]

يٰقَوْمِ اِنَّمَا هٰذِهِ الْحَيٰوةُ الدُّنْيَا مَتَاعٌ ۡ وَّاِنَّ الْاٰخِرَةَ هِىَ دَارُ الْقَرَارِ ﴿٣٩﴾

(३९) हे मेरा समुदायका मानिसहरु ! यो सांसारिक जीवन नश्वर संसाधन हो[२] (विश्वास गर शान्ति) एवं स्थाई घर त आख़िरत नै हो ।[३]

مَنْ عَمِلَ سَيِّئَةً فَلَا يُجْزٰٓى اِلَّا مِثْلَهَا ۚ وَمَنْ عَمِلَ صَالِحًا مِّنْ ذَكَرٍ اَوْ اُنْثٰى وَهُوَ مُؤْمِنٌ فَاُولٰٓئِكَ يَدْخُلُوْنَ الْجَنَّةَ يُرْزَقُوْنَ فِيْهَا بِغَيْرِ حِسَابٍ ﴿٤٠﴾

(४०) जसले पाप गरेको छ, त्यसको त बराबरको प्रतिफल नै छ;[४] तथा जसले पुण्य गरेको छ चाहे त्यो पुरुष होस् अथवा महिला तथा त्यो इमान्दार होस्, त यी मानिसहरु[५] स्वर्गमा जानेछन् तथा असीम जीविका पाउनेछन् ।[६]

नराम्रो नै निस्क्यो तथा अन्ततः आफ्नो समेत पानीमा डुबाइयो ।

[१]फिर्औनको जातिमध्ये ईमान स्वीकार गर्नेवाला फेरि बोल्यो तथा भन्यो कि दावा त फिर्औन पनि गर्दछ कि म तिमीलाई सोझो मार्गमा हिंडाइराखेको छु । किन्तु वास्तविकता यो हो कि फिर्औन मार्गबाट विचलित छ । म जुन मार्गका चिन्ह बताइराखेको छु, त्यो सोझो मार्ग हो, जसतिर तिमी ईशदूत मूसा अलैहिस्सलाम आमन्त्रित गरिराखेका छन् ।

[२]जसको जीवन केही दिनको छ तथा त्यो पनि आख़िरत (परलोक) को अपेक्षा प्रातः अथवा सन्ध्याको एकक्षणको बराबर छ ।

[३]जसको न विलय तथा विनाश हुन्छ, न त्यहाँबाट स्थानान्तरण हुनेछ । कोही नर्कमा जाओस् अथवा स्वर्गमा सबैको जीवन सधैंका लागि हुन्छ । एउटा सुख-सुविधाको जीवन, दोस्रो दुर्भाग्य तथा यातनाको जीवन । मृत्यु न नर्कवासीहरुलाई आउनेछ न स्वर्गवासीहरुलाई ।

[४]अर्थात् नराम्रोका समान नै प्रतिकार हुनेछ, अधिक होइन तथा त्यसका अनुकूल नै यातना हुनेछ जो न्याय तथा निसाफको दर्पण हुनेछ ।

[५]अर्थात् ती जो ईमान्दार पनि हुन्छन् तथा राम्रा कर्महरुका पालन गर्नेवाला पनि । त्यसको खुला अभिप्राय यो हो कि सत्कर्म बिना ईमान अथवा ईमान बिना सत्कर्मको अल्लाहका निकट कुनै मूल्य हुनेछैन । अल्लाहका पास सफलताका लागि ईमानका साथ सदाचार तथा सदाचारका साथ ईमान आवश्यक छ ।

[६]अर्थात् बिना अनुमान तथा हिसाब अनुकम्पाहरु सुलभ हुनेछन् जसको समाप्तिको पनि

وَيٰقَوْمِ مَا لِيْٓ اَدْعُوْكُمْ اِلَى النَّجٰوةِ وَتَدْعُوْنَنِيْٓ اِلَى النَّارِ ﴿٤١﴾

(४१) तथा मेरो जातिका मानिसहरु ! यो के कुरो हो कि म तिमीलाई मोक्षतिर बोलाइराखेको छु,[१] तथा तिमी मलाई नरकतिर बोलाइराखेका छौ ।[२]

تَدْعُوْنَنِيْ لِاَكْفُرَ بِاللّٰهِ وَاُشْرِكَ بِهٖ مَا لَيْسَ لِيْ بِهٖ عِلْمٌ وَّاَنَا اَدْعُوْكُمْ اِلَى الْعَزِيْزِ الْغَفَّارِ ﴿٤٢﴾

(४२) तिमी मलाई यो आमन्त्रण दिइराखेका छौ कि म अल्लाहको साथ कुफ्र गरुँ तथा त्यसका साथ शिर्क गरुँ जसको कुनै ज्ञान मलाई छैन, तथा म तिमीलाई प्रभावशाली, क्षमा गर्ने (उपास्य) तिर आमन्त्रित गरिराखेको छु ।[३]

لَا جَرَمَ اَنَّمَا تَدْعُوْنَنِيْٓ اِلَيْهِ لَيْسَ لَهٗ دَعْوَةٌ فِي الدُّنْيَا

(४३) यो निश्चित कुरो छ कि तिमी मलाई जसतिर आमन्त्रित गरिराखेका छौ, त्यो न त संसारमा पुकार्न योग्य छ[४] तथा न



कुनै भय हुनेछैन ।

[१]तथा त्यो यो कि मात्र एक अल्लाहको उपासना गर जसको कोही साझेदार छैन तथा त्यसका रसूललाई मान जसलाई उसले तिम्रा मार्गदर्शनको लागि पठाएको छ ।

[२]अर्थात् तौहीद (एकेश्वरवाद) को साटो शिर्क (अनेकेश्वरवाद) को आमन्त्रण दिइराखेका छौ जो मनुष्यलाई नर्कमा लग्नेछ जस्तो कि आगामी आयतमा स्पष्ट गरिएको छ ।

[३]عَزِيْز (प्रभुत्वशाली) जो काफिरहरुसित बदला लिन तथा यातना दिनमा समर्थ छ । غَفَّار (गफ़्फ़ार), आफ्ना मान्यहरुका गल्तीहरु तथा भूललाई क्षमा गर्नेहरु तथा तिनमाथि आवरण पार्नेवाला । जबकि तिमी जसको उपासनातिर बोलाइराखेका छौ ती अति हीन तथा पतित छन्, न उनी सुन्न सक्दछन् न उत्तर दिन सक्छन्, कसैलाई लाभ पुर्‍याउनमा सामर्थ्य न हानि पुर्‍याउनमा ।

[४]لَا جَرَمَ यो कुरो निश्चित छ अथवा यसमा झूठ छैन ।

[५]अर्थात् तिनीहरु कसैको पुकार सुन्ने योग्यता नै राख्दैनन् कि कसैलाई लाभ पुर्‍याउन सकून्, अथवा ईश्वरत्व (उपास्य) को अधिकार उनलाई प्राप्त छ । यसको लगभग त्यही भावार्थ छ जो यस आयत र यी जस्ता अनेक आयातहरुमा वर्णन गरिएको छ ।

﴿وَمَنْ اَضَلُّ مِمَّنْ يَّدْعُوْا مِنْ دُوْنِ اللّٰهِ مَنْ لَّا يَسْتَجِيْبُ لَهٗٓ اِلٰى يَوْمِ الْقِيٰمَةِ وَهُمْ عَنْ دُعَآئِهِمْ غٰفِلُوْنَ﴾ (अल-अहक़ाफ़-५)

وَلَا فِي الْآخِرَةِ وَأَنَّ مَرَدَّنَا إِلَى اللَّهِ وَأَنَّ الْمُسْرِفِينَ هُمْ أَصْحَابُ النَّارِ ﴿٤٣﴾

आख़िरतमा[1] तथा यो (पनि निश्चित कुरो छ) कि हामी सबै अल्लाहतिरै फर्कनुछ[2] तथा सीमा उल्लंघन गर्नेहरु निःसन्देह नरकवाला हुन् ।[3]

فَسَتَذْكُرُونَ مَا أَقُولُ لَكُمْ ۚ وَأُفَوِّضُ أَمْرِي إِلَى اللَّهِ ۚ إِنَّ اللَّهَ بَصِيرٌ بِالْعِبَادِ ﴿٤٤﴾

(४४) त अगाडी गएर तिमी मेरा कुराहरुलाई याद गर्नेछौ ।[4] म आफ्नो मामिला अल्लाहलाई समर्पित गर्दछु ।[5] निःसन्देह अल्लाह (तआ़ला) भक्तहरुलाई देख्दछ ।[6]

﴿ إِن تَدْعُوهُمْ لَا يَسْمَعُوا دُعَاءَكُمْ وَلَوْ سَمِعُوا مَا اسْتَجَابُوا لَكُمْ ﴾

"यदि तिमी उनीहरुलाई पुकार्दछौ भने उनीहरु तिम्रा पुकार सुन्दैनन् र यदि (मान कि) सुनी पनि हाल्छन् त स्वीकार गर्न सक्दैनन् ।" (फ़ातिर-१४)

[1]अर्थात् आख़िरतमा नै कसैको पुकार सुनेर कसैलाई मुक्त गराउने अथवा सिफ़ारिश नै गर्न समर्थ हुन्छन् ? यो पनि सम्भव छैन । यस्ता कुराहरु यस योग्य कसरी हुनसक्छन् कि ती पूज्य बनून् तथा उनको पूजा गरियोस् ?

[2]जहाँ प्रत्येकको हिसाब हुनेछ तथा कर्मानुसार राम्रो-नराम्रो प्रतिफल दिइनेछ ।

[3]अर्थात् काफ़िर तथा मुश्रिक जो अल्लाहको अवज्ञामा सीमा उल्लघंन गर्दछन् । यसप्रकार जो अत्याधिक पापी मुसलमान हुनेछन्, जसको अवज्ञा अतिको सीमासम्म पुगेको हुनेछ उनीहरुले पनि केही समय नरकको यातना भोग्नुपर्नेछ । अनि त्यस पश्चात रसूल सल्लल्लाहु अलैहि वसल्लमको सिफारिश अथवा अल्लाहको इच्छाले उनलाई नरकबाट निकालेर स्वर्गमा प्रवेश गराइनेछ ।

[4]शीघ्र त्यो समय आउनेछ जब मेरा कुराहरुको सत्यता तथा जुन कुराबाट रोकिन्थ्यो त्यसको दुष्परिणाम तिमीमाथि स्पष्ट हुनेछ । अनि तिमी पश्चाताप गर्नेछौ किन्तु त्यो समय यस्तो हुनेछ कि लज्जाले पनि कुनै फाइदा दिने छैन ।

[5]अर्थात् त्यसैमाथि भरोसा गर्दछु तथा त्यसैबाट प्रत्येक समय सहायता माँग्दछु तथा तिमीसित सम्बन्ध तोड्न तथा अलग हुने कुराको घोषणा गर्दछु ।

[6]अर्थात् त्यो उनीहरुलाई देखिराखेको छ । पछि त्यो सन्मार्गका पात्रलाई मार्ग देखाउँछ तथा पथभ्रष्टताका पात्रलाई कुमार्ग गरिदिन्छ । यी कुराहरुमा जुन हिक्मत छ, तिनलाई त्यही राम्ररी जान्दछ ।

(४५) त त्यसलाई अल्लाह (तआला) ले समस्त कुकर्महरुबाट सुरक्षित राख्यो जो उनीहरुले सोचेका थिए[1] तथा फिर्औनका अनुयायीहरु माथि नराम्रो प्रकारको प्रकोप आइपऱ्यो ।[2]

فَوَقَٰهُ ٱللَّهُ سَيِّـَٔاتِ مَا مَكَرُوا۟ وَحَاقَ بِـَٔالِ فِرْعَوْنَ سُوٓءُ ٱلْعَذَابِ ﴿٤٥﴾

(४६) अग्नि हो जसका समक्ष यिनी प्रत्येक प्रातः एवं सन्ध्यामा ल्याइन्छन्;[3] तथा जुन दिन क़्यामत स्थापित हुनेछ (आदेश हुनेछ कि)

ٱلنَّارُ يُعْرَضُونَ عَلَيْهَا غُدُوًّا وَعَشِيًّا ۖ وَيَوْمَ تَقُومُ ٱلسَّاعَةُ أَدْخِلُوٓا۟

[1]अर्थात् त्यसको जाति किब्तले त्यस ईमान्दारका सत्यंका प्रदर्शनका कारण त्यसका विपरीत जो षड्यन्त्र गरे तथा योजना रचे, ती सबैलाई असफल बनाइदियो तथा उसलाई आदरणीय मुसाका साथ मुक्ति प्रदान गरिदियो तथा परलोकमा त्यसको घर स्वर्ग हुनेछ ।

[2]अर्थात् संसारमा उनीहरुलाई समुद्रमा डुबाइयो तथा परलोकमा उनका लागि नरक़को घोर यातना छ ।

[3]यस आगोमा "बर्ज़ख" मा अर्थात् चिहानहरुमा उनी नित्य प्रातः सन्ध्या पेश गरिन्छन्, जसबाट कब्रको (चिहान) को यातना सिद्ध हुन्छ, जसको केही मानिस इन्कार गर्दछन् । हदीसहरुमा त बडो विस्तारपूर्वक कब्र चिहानको यातनामाथि प्रकाश पारिएको छ । जस्तै आदरणीय आयशा رضي الله عنها का प्रश्नोत्तरमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

«نَعَمْ ! عَذَابُ القَبْرِ حَقٌّ».

"हो, कब्रको (चिहानको) यातना सत्य हो ।" (सहीह बुख़ारी, किताबुल जनायज, बाबु माजाअ फी अज़ाबिल क़ब्रे)

यसप्रकार एउटा अर्को हदीसमा भन्नुभयो,

"जब तिमीहरुमध्ये कोही मर्दछ त (चिहानमा) प्रातः सन्ध्या त्यसको स्थान प्रस्तुत गरिन्छ ।" अर्थात् यदि त्यो स्वर्गको पात्र छ भने स्वर्ग तथा नरकको पात्र छ भने नरक़ त्यसका समक्ष प्रस्तुत गरिन्छ तथा भनिन्छ कि यो तेरो मूल स्थान हो, जहाँ केयामतका दिन अल्लाह तआलाले तिमीलाई पठाउनेछ । (सहीह बुख़ारी, बाबुल मय्येते युअ्रजु बिल ग़दाते वल अशीये, मुस्लिम किताबुल जन्नते, बाबु अर्ज़े मकअदिल मय्येते)

यसको अभिप्राय यो हो कि जो कब्रको यातनाको इन्कार गर्दछन्, तिनीहरु कुर्आन तथा हदीस दुबैको व्याख्यालाई मान्दैनन् ।

آلَ فِرْعَوْنَ أَشَدَّ الْعَذَابِ ﴿٤٦﴾

फिरऔनका अनुयायीलाई अति कठोर यातनामा पार ।[1]

وَإِذْ يَتَحَاجُّونَ فِي النَّارِ فَيَقُولُ الضُّعَفَاءُ لِلَّذِينَ اسْتَكْبَرُوا إِنَّا كُنَّا لَكُمْ تَبَعًا فَهَلْ أَنتُم مُّغْنُونَ عَنَّا نَصِيبًا مِّنَ النَّارِ ﴿٤٧﴾

(४७) तथा जब नरकमा एक-अर्कासित भगडा गर्नेछन् त कमजोरहरु अहङ्कारीहरुसित (जसका यिनी अधीन थिए) भन्नेछन् कि हामी त तिम्रा अनुयायी थियौं त के अब तिमी हामीबाट यस अग्निको कुनै भाग हटाउन सक्छौ ?

قَالَ الَّذِينَ اسْتَكْبَرُوا إِنَّا كُلٌّ فِيهَا إِنَّ اللَّهَ قَدْ حَكَمَ بَيْنَ الْعِبَادِ ﴿٤٨﴾

(४८) ती ठूलाहरु उत्तर दिनेछन् कि हामी त सबै यसै अग्निमा छौं अल्लाह (तआला) ले आफ्ना दासहरुका बीच निर्णय गरिसकेको छ ।

وَقَالَ الَّذِينَ فِي النَّارِ لِخَزَنَةِ جَهَنَّمَ ادْعُوا رَبَّكُمْ يُخَفِّفْ عَنَّا يَوْمًا مِّنَ الْعَذَابِ ﴿٤٩﴾

(४९) तथा समस्त नरकवासी (एकत्रित भएर) नरकका रक्षकहरुसित भन्नेछन् कि तिमी नै आफ्ना प्रभुसित प्रार्थना गर कि त्यसले कुनै दिन पनि हाम्रो यातनामा कमी गरिदेओस् ।

قَالُوا أَوَلَمْ تَكُ تَأْتِيكُمْ رُسُلُكُم بِالْبَيِّنَاتِ ۖ قَالُوا بَلَىٰ ۚ قَالُوا فَادْعُوا ۗ

(५०) उनीहरुले उत्तर दिनेछन् कि के तिम्रा निकट तिम्रा रसूल चमत्कार लिएर आएका थिएनन्, उनीहरुले भन्नेछन् कि किन होइन । उनीहरु भन्नेछन् कि तसर्थ तिमी

[1]यसबाट पूर्ण स्पष्ट छ कि अग्निमाथि पेश गरिने मामिला जो प्रातः सन्ध्या हुन्छ, केयामतभन्दा पहिला बर्ज़ख तथा कब्रकै जीवन हो । प्रलयका दिन उनलाई कब्रबाट निकालेर कडा यातना अर्थात् नरकमा हालिनेछ । 'आले फ़िरऔन' सित अभिप्राय स्वयं फिरऔन तथा त्यसको जाति एवं त्यसका सबै अनुयायी हुन् । यो भन्नु कि हामीलाई त कब्रमा मृतक आरामसित भएको देखिन्छ, उसलाई यातना हुन्छ भने यस स्थितिमा देखाइ दिंदैन, बकवास हो किनकि यातनाका लागि यो आवश्यक छैन कि हामीलाई देखियोस् पनि । अल्लाह हरप्रकारले यातना दिन समर्थ छ । के हामी देख्दैनौं कि एउटा व्यक्ति स्वप्नमा अति दुखद दृश्य देखेर बडो छटपटी तथा दुखको संवेदन गर्दछ, किन्तु देख्नेलाई अलिकति पनि प्रतीत हुँदैन कि यो निदाएको व्यक्ति घोर दुखमा छ, यसका उपरान्त पनि कब्रको यातनाको इन्कार मात्र हटधर्मी हो । बरु जागृत अवस्थामा पनि मानिसलाई जुन दुखहरु हुन्छन् ती स्वयं प्रदर्शित हुँदैनन् बरु केवल मानिसको तड्पन तथा छट्पटी प्रतीत हुन्छ, र यो पनि त्यस दशामा जब त्यो तड्पन्छ तथा छट्पटाउन्छ ।

وَمَا دُعَـٰٓؤُا۟ ٱلْكَـٰفِرِينَ إِلَّا فِى ضَلَـٰلٍ ۝٥٠

नै प्रार्थना गर[1] तथा काफ़िरहरुको प्रार्थना मात्र (अप्रभावी तथा) व्यर्थ छ ।[2]

إِنَّا لَنَنصُرُ رُسُلَنَا وَٱلَّذِينَ ءَامَنُوا۟ فِى ٱلْحَيَوٰةِ ٱلدُّنْيَا وَيَوْمَ يَقُومُ ٱلْأَشْهَـٰدُ ۝٥١

(५१) निश्चय हामी आफ्ना रसूलहरुको तथा ईमान भएको सांसारिक जीवनमा पनि सहायता गर्नेछौं तथा त्यस दिन पनि जब साक्ष्य दिनेहरु उभिनेछन् ।[4]

---

[1]हामी यस्ता मानिसहरुका लागि कसरी भन्न सक्छौं जसका पासमा अल्लाहका सन्देशबाहक प्रमाण तथा चमत्कार लिएर आए परन्तु उनीहरुले चिन्ता गरेनन् ।

[2]अन्ततः उनीहरुले अल्लाहसित स्वयं नै गुहार गर्नेछन् परन्तु त्यसको त्यहाँ सुनुवाई हुनेछैन, यसकारण कि संसारमा उनीमाथि तर्क पूरा गरिसकिएको थियो । अब आख़िरत त क्षमा-याचना, ईमान एवं कर्मको ठाउँ होइन, त्यो त प्रतिकार गृह हो । संसारमा जे गरेको हुनेछ त्यसको फल त्यहाँ भोग्नेछ ।

[3]अर्थात् उनका शत्रुहरुलाई अपमानित गर्नेछन् तथा उनलाई प्रभुत्व प्रदान गर्नेछन् । केही मानिसहरुका मनमा यो शंका उत्पन्न हुनसक्छ कि केही नबी हत गरिए, जस्तै आदरणीय यहया एवं ज़करीया (अलैहिस्सलाम) आदि तथा केही प्रवासका लागि बाध्य भए, जस्तै इब्राहीम अलैहिस्सलाम तथा हाम्रा पैग़म्बर सल्लल्लाहु अलैहि वसल्लम एवं उहाँका सहाबा (सहचर रिज़वानुल्लाहे अलैहिम अजमईन) सहायताका वचनका उपरान्त यस्तो किन भयो ? वास्तवमा यो वाचा साधारण स्थिति एवं अधिकताका आधारमा छ । अतः केही स्थितिमा तथा केही व्यक्तिहरुमाथि काफ़िरहरुको प्रभुत्व यसका प्रतिकूल छैन । अथवा अभिप्राय यो छ कि सामयिक रुपले कहिल्यै अल्लाहको हिक्मत एवं इच्छाका अधीन काफ़िरहरुलाई प्रभुत्व दिइन्छ किन्तु अन्ततः ईमान भएका नै प्रभावशाली तथा सफल हुन्छन् । जस्तै आदरणीय ज़करीया तथा यहयाका हत्याराहरुमाथि पछि अल्लाह तआलाले उनका शत्रुहरुलाई नियुक्त गरिदियो, जसले उनका रक्तले आफ्नो तिर्खा भेटाए तथा उनलाई अपमानित तथा निरादर गरे । जुन यहूदीहरुले ईशदूत ईसालाई फाँसी दिएर मार्न चाहे, अल्लाहले ती यहूदीमाथि रोमिहरुलाई यस्तो विजय दियो कि उनीहरुले यहूदीहरुलाई अपमानजनक यातनाहरु चखाए । इस्लामका पैग़म्बर तथा ईशदूत तथा उहाँका अनुयायी वस्तुतः प्रस्थान गर्न बाध्य भए किन्तु बद्र, ओहुद, अहज़ाब तथा ख़ैबर त्यस पश्चात मक्का विजयद्वारा अल्लाहले मुसलमानहरुको सहायता गऱ्यो तथा आफ्ना पैग़म्बर एवं ईमानवालालाई जुनप्रकार प्रभुत्व प्रदान गऱ्यो, त्यसका पश्चात अल्लाहका सहायतामा के शंका बाँकी रहन्छ ? (इब्ने कसीर)

[4] اشهاد (अश्हाद) यो شهيد (शहीद) को बहुवचन हो, जस्तै شريف (शरीफ़) को बहुवचन أشراف (अशराफ़) हो । क़्यामत, (प्रलय) का दिन फरिश्ता तथा अम्बिया साक्ष्य दिनेछन्, अथवा फरिश्ताहरु यो साक्ष्य दिनेछन् कि हे अल्लाह ! पैग़म्बरहरुले तिम्रो सन्देश पुऱ्याएका थिए किन्तु उनका समुदायहरुले भुठ्लाइदिए ।

يَوْمَ لَا يَنفَعُ الظَّٰلِمِينَ مَعْذِرَتُهُمْ وَلَهُمُ اللَّعْنَةُ وَلَهُمْ سُوٓءُ الدَّارِ ۝٥٢

(५२) जुन दिन अत्याचारीहरुको विवशता (बहाना) कुनै लाभ दिनेछैन[1] एवं उनका लागि धिक्कार नै हुनेछ तथा उनका लागि नराम्रो घर हुनेछ ।

وَلَقَدْ ءَاتَيْنَا مُوسَى الْهُدَىٰ وَأَوْرَثْنَا بَنِىٓ إِسْرَٰٓءِيلَ الْكِتَٰبَ ۝٥٣

(५३) तथा हामीले मूसालाई मार्गदर्शिका प्रदान गर्‍यौं[2] तथा इस्राईलको सन्तानलाई यस किताबको उत्तराधिकारी बनायौं ।[3]

هُدًى وَذِكْرَىٰ لِأُولِى الْأَلْبَٰبِ ۝٥٤

(५४) कि त्यो मार्गदर्शन एवं शिक्षा थियो बुद्धिमानीहरुका लागि ।[4]

فَاصْبِرْ إِنَّ وَعْدَ اللَّهِ حَقٌّ وَاسْتَغْفِرْ لِذَنۢبِكَ وَسَبِّحْ بِحَمْدِ رَبِّكَ بِالْعَشِىِّ

(५५) तसर्थ (हे नबी !) तिमी धैर्य राख । अल्लाहको वचन (नि:सन्देह) सत्य नै छ, तिमी आफ्ना पापहरुको क्षमा माँग्दै रह[5] तथा बिहान

यसका अतिरिक्त नबी सल्लल्लाहु अलैहि वसल्लम तथा उहाँका अनुयायीले पनि साक्ष्य दिनेछन् जस्तो कि पहिला पनि वर्णन गरिसकिएको छ । यसकारण केयामतलाई साक्षीहरुको उभिने दिन भनिएको छ । त्यस दिन ईमान भएकाहरुको सहायता गर्नुको अभिप्राय हो उनलाई उनका सत्कर्महरुको प्रतिफल दिइनेछ तथा उनलाई स्वर्गमा प्रवेश दिइनेछ ।

[1]अर्थात् अल्लाहको दयाबाट दूरी तथा धिक्कार तथा विवशता एवं सफाई दिनुको लाभ यसकारण हुनेछैन कि त्यो क्षमा-याचनाको स्थान होइन, अत: क्षमा-याचना व्यर्थ हुनेछ ।

[2]अर्थात् नबूअत (दूतत्व) तथा धर्मग्रन्थ तौरात प्रदान गर्‍यौ, जस्तो कि भन्यो ﴿إِنَّآ أَنزَلْنَا التَّوْرَىٰةَ فِيهَا هُدًى وَنُورٌ﴾ (अल-मायदा-४४)

[3]अर्थात् धर्मशास्त्र तौरात ईशदूत मूसाका पश्चात पनि शेष रहयो जसका सन्तान पछि सन्तान तिनी उत्तराधिकारी हुँदैरहे । अथवा किताबसित अभिप्राय ती सबै धर्मशास्त्र हुन् जो इस्राईल वंशका नबीहरुमाथि अवतरित भए, यी सबै धर्मशास्त्रहरुको उत्तराधिकारी इस्राईलको सन्तानहरुलाई बनायौं ।

[4]هُدَى (हूदा) तथा ذكرى (ज़िक्रा) धातु हो । तथा अवस्थावाचीका रुपमा आएका छन् । अत: उनीमाथि 'अ' को मात्रा छ अर्थात् هاد पथ-प्रदर्शक तथा مذكر सदुपदेशक । बुद्धिमानहरुसित अभिप्राय स्वच्छ बुद्धिका मालिक हुन् किनकि तिनै आकाशीय ग्रन्थहरुबाट लाभ उठाउँछन् तथा मार्गदर्शन एवं सदुपदेश प्राप्त गर्दछन् । अरुहरु त गधाहरुका समान छन् जसमाथि ग्रन्थहरुको भार त लादिएको छ किन्तु उनीहरु त्यसबाट अचेत हुन्छन् कि ती ग्रन्थहरुमा के छ ।

[5]पापसित अभिप्राय त्यो अलि-अलि पनि भूल-चूक हो जो मानवीय प्रकृतिका कारण हुनजान्छन् जसको सुधार पनि अल्लाहको तर्फबाट गरिन्छ । अथवा इस्तिग़फ़ार (क्षमा माँग्नु) पनि

وَالْاِبْكَارِ ﴿٥٥﴾

साँझ[1] आफ्नो प्रभुको पवित्रतागान एवं महिमागान गरिराख ।

اِنَّ الَّذِيْنَ يُجَادِلُوْنَ فِيْٓ اٰيٰتِ اللّٰهِ بِغَيْرِ سُلْطٰنٍ اَتٰىهُمْ ۙ اِنْ فِيْ صُدُوْرِهِمْ اِلَّا كِبْرٌ مَّا هُمْ بِبَالِغِيْهِ ۚ فَاسْتَعِذْ بِاللّٰهِ ؕ اِنَّهٗ هُوَ السَّمِيْعُ الْبَصِيْرُ ﴿٥٦﴾

(५६) नि:सन्देह जो मानिस आफ्ना पासमा कुनै प्रमाण नहुनुका उपरान्त अल्लाहका आयतहरुमा लड्छन्; उनका हृदयमा बडाईका अतिरिक्त अन्य केही छैन जो यस बडाईसम्म (घमण्ड) पुग्नेवाला छैनन्,[2] तसर्थ तिमी अल्लाहको शरण माँग्दैगर, नि:सन्देह त्यो पूर्णरुपले सुन्नेवाला तथा सबभन्दा अधिक देख्नेवाला छ ।

لَخَلْقُ السَّمٰوٰتِ وَالْاَرْضِ اَكْبَرُ مِنْ خَلْقِ النَّاسِ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٥٧﴾

(५७) आकाशहरु तथा धर्तीको उत्पत्ति नि:सन्देह मुनष्यको उत्पत्तिभन्दा निकै ठूलो कार्य हो, परन्तु (यो अर्कै कुरा हो कि) अधिकतर मानिस जान्दैनन् ।[3]

وَمَا يَسْتَوِي الْاَعْمٰى وَالْبَصِيْرُ ۙ وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَلَا الْمُسِيْٓءُ ؕ قَلِيْلًا مَّا تَتَذَكَّرُوْنَ ﴿٥٨﴾

(५८) तथा अन्धा एवं दृष्टिवाला समान छैनन्; न उनीहरु जसले ईमान स्वीकार गरे तथा राम्रा कार्य गरे कुकर्मीहरुका (समान छन्)[4] तिमी (निकै) कम

---

एउटा उपासना नै हो । पुण्य तथा प्रतिफलमा अधिकताका लागि (क्षमा माँग्नु) को आदेश दिएको छ, अथवा अभिप्राय अनुयायीहरुलाई निर्देश दिनु हो कि उनी क्षमा-याचनावाट विमुख नहोऊन् ।

[1] عَشِيّ (अशी) सित दिनको अन्तिम तथा रातको प्रारम्भिक भाग तथा إبـكار (इबकार) सित रातको अन्तिम तथा दिनको आरम्भिक भाग अभिप्राय हो ।

[2] अर्थात् जो आकाशीय प्रमाण बिना विवाद तथा तर्क-वितर्क गर्दछन् । उनीहरु केवल अहङ्कारका कारण यस्तो गर्दछन् । तैपनि उनीसित जो उनको लक्ष्य हो कि सत्य निर्वल तथा असत्य दृढ होस्, त्यो उनीहरुलाई प्राप्त हुनेछैन ।

[3] अर्थात् त्यसपछि, यिनीहरु किन यस कुराबाट नकार्दछन् कि अल्लाह मानिसहरुलाई पुन: जीवित गर्न सक्दैनन् । जबकि यो काम आकाशहरु तथा धर्तीलाई पैदा गर्नुभन्दा अत्याधिक सरल छ ।

[4] अभिप्राय यो हो कि जुनप्रकार अन्धा तथा आँखा भएका समान छैनन, त्यसैप्रकार इमान्दार तथा काफ़िर, सदाचारी तथा दूराचारी समान छैनन् । बरु केयामतका दिन उनीहरुका बीच जो ठूलो अन्तर हुनेछ, त्यो एकदमै खुलेर स्पष्टरुपमा अगाडी आउनेछ ।

शिक्षा प्राप्त गरिराखेका छौ ।

(५९) केयामत निश्चय तथा निःसन्देह आउनेछ, परन्तु (यो अर्कै कुरा हो कि) अधिकतर मानिस ईमान स्वीकार गर्दैनन् ।

إِنَّ السَّاعَةَ لَآتِيَةٌ لَّا رَيْبَ فِيهَا وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يُؤْمِنُونَ ﴿٥٩﴾

(६०) तथा तिम्रो प्रभुको आदेश (लागू भइसकेको) छ कि मसित प्रार्थना गर म तिम्रा प्रार्थनाहरुलाई स्वीकार गर्नेछु ।[1] विश्वास गर कि जो मानिस मेरो इबादतबाट अहङ्कार गर्दछन्, उनीहरु अति शीघ्र अपमानित भई नरक्मा पुग्नेछन् ।[2]

وَقَالَ رَبُّكُمُ ادْعُونِي أَسْتَجِبْ لَكُمْ ۚ إِنَّ الَّذِينَ يَسْتَكْبِرُونَ عَنْ عِبَادَتِي سَيَدْخُلُونَ جَهَنَّمَ دَاخِرِينَ ﴿٦٠﴾

(६१) अल्लाह (तआला) ले तिम्रा लागि रात्रि

اللَّهُ الَّذِي جَعَلَ لَكُمُ اللَّيْلَ لِتَسْكُنُوا

[1]विगत आयतमा जब अल्लाहले केयामत घटित हुने कुराको चर्चा गऱ्यो त यस आयतमा यस्तो निर्देश दिराखिएको छ, जसलाई अपनाएर मानिस परलोकको सौभाग्य प्राप्त गर्न सकोस् । यस आयतमा प्रार्थनासित अधिकतर भाष्यकारहरुले इबादत (उपासना) तात्पर्य लिएका छन् । जस्तो कि हदीसमा पनि दुआ (प्रार्थना) लाई इबादत बरु इबादतको मूल तत्व भनिएको छ, «الدُّعَاءُ هُوَ الْعِبَادَةُ» तथा «الدُّعَاءُ مُخُّ الْعِبَادَةِ» (मुसनद अहमद-४/२७१, मिश्कात-किताबुद दावात) । यसका अतिरिक्त, यसका पश्चात ﴿يَسْتَكْبِرُونَ عَنْ عِبَادَتِي﴾ का शब्दहरुबाट पनि स्पष्ट छ कि अभिप्राय उपासना हो, केही विद्वानहरु भन्छन् कि दुआ (प्रार्थना) सित अभिप्राय प्रार्थना नै हो, अर्थात् अल्लाहबाट लाभको प्राप्ति तथा हानिका निराकरणको प्रश्न गर्नु । किनकि दुआको धार्मिक तथा वास्तविक अर्थ 'माँग्नु' हो । अर्को अर्थमा त्यसको प्रयोग वास्तविक अर्थमा छैन । यसका अतिरिक्त दुआ पनि आफ्ना शाब्दिक अर्थका आधारमा तथा उपरोक्त हदीसका अनुसार पनि इबादत (उपासना) नै हो, किनकि बिना साधन कुनै कुरा कसैसित माँग्नु तथा त्यससित प्रश्न गर्नु, यो त्यसको इबादत (आराधना) नै हो । (फ़तहुल क़दीर) अभिप्राय दुबै स्थितिहरुमा एउटै हो कि अल्लाहका अतिरिक्त कुनै अन्यलाई आवश्यकताको माँग तथा सहायतको लागि पुकार्नु वैध (उचित) छैन । किनकि यसप्रकार साधनहरु बिना कसैलाई काम निकाल्नका लागि पुकार्नु त्यसको आराधना हो तथा इबादत (आराधना) अल्लाहका अतिरिक्त कसैको वैध (उचित) छैन ।

[2]यो अल्लाहको उपासनासित इन्कार तथा विमुखता एवं त्यसमा अरुलाई पनि साझी बनाउनेहरुको दुष्परिणाम हो ।

فِيهِ وَالنَّهَارَ مُبْصِرًا ۚ إِنَّ اللَّهَ لَذُو فَضْلٍ عَلَى النَّاسِ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَشْكُرُونَ ﴿٦١﴾

बनाएको छ कि तिमी त्यसमा विश्राम गर्न सक[१] तथा दिनलाई देखाउनेवाला बनायो ।[२]निःसन्देह अल्लाह (तआला) मानिसहरुमाथि उपकार एवं कृपा गर्नेवाला छ परन्तु अधिकतर मानिसहरु कृतज्ञता व्यक्त गर्दैनन् ।[३]

ذَٰلِكُمُ اللَّهُ رَبُّكُمْ خَالِقُ كُلِّ شَيْءٍ لَّا إِلَٰهَ إِلَّا هُوَ ۖ فَأَنَّىٰ تُؤْفَكُونَ ﴿٦٢﴾

(६२) यही अल्लाह हो तिमी सबैको पालनपोषण गर्नेवाला, प्रत्येक वस्तुको स्रष्टा, त्यसका अतिरिक्त कोही सत्य-पूज्य छैन; अनि कतातिर तिमी फर्किजान्छौ ?[४]

كَذَٰلِكَ يُؤْفَكُ الَّذِينَ كَانُوا بِآيَاتِ اللَّهِ يَجْحَدُونَ ﴿٦٣﴾

(६३) त्यसैप्रकार ती मानिसहरु पनि, फर्काइँदैरहे जो अल्लाहका आयतहरुको इन्कार गर्दथे ।

اللَّهُ الَّذِي جَعَلَ لَكُمُ الْأَرْضَ قَرَارًا وَالسَّمَاءَ بِنَاءً وَصَوَّرَكُمْ

(६४) अल्लाह[५] नै जसले तिम्रा लागि धर्तीलाई निवासस्थान[६] तथा आकाशलाई छाना बनाइदियो,[७] र तिम्रो रुप दियो तथा धेरै

[१]अर्थात् रातलाई अँध्यारो बनायो ताकि दैनिक कार्य निलम्बित होस् तथा मानिसहरु शान्तिपूर्वक सुत्न सकून् ।

[२]अर्थात् प्रकाशमय बनायो ताकि व्यवसायिक श्रम तथा दौडधूपमा बाध्यता नहोस् ।

[३]अल्लाहका वरदानहरुकाबारे न उनलाई स्वीकार नै गर्दछन् कुफ्र तथा इन्कारका कारण जस्तो कि काफिरहरुको आचरण छ, अथवा उपकार गर्नेवालाको कृतज्ञतालाई त्याग त्यसबाट आलस्यका कारण जस्तो कि मूर्खहरुको रीति छ ।

[४]अर्थात् त्यसपछि तिमी त्यसको उपासनाबाट किन विमुख हुन्छौ तथा त्यसको तौहीद (एकता) बाट किन विमुख हुन्छौ तथा घमण्ड गर्दछौ ।

[५]अगाडी अल्लाहका उपकारहरुका केही प्रकार वर्णन गरिएका छन् ताकि अल्लाहको पूर्ण सामर्थ्य पनि स्पष्ट होस् तथा त्यसको अन्यका साझेदारी बिना उपास्य हुनु पनि ।

[६]जसमा तिमी निवास गर्दछौ, हिंडडुल गर्दछौ, व्यापार गर्दछौ तथा जीवन निर्वाह गर्दछौ अनि अन्ततः मृत्युको मुखमा गई केयामतसम्मका लागि त्यसैमा निदाइरहन्छौ ।

[७]अर्थात् स्थिर दृढ छत, यदि त्यसको खस्ने डर भएको भए कोही आरामसित न सुत्न सक्थ्यो न कसैका लागि जीवन व्यतीत गर्न संभव हुन्थ्यो ।

فَأَحْسَنَ صُوَرَكُمْ وَرَزَقَكُم مِّنَ الطَّيِّبَٰتِ ۚ ذَٰلِكُمُ اللَّهُ رَبُّكُمْ ۖ فَتَبَارَكَ اللَّهُ رَبُّ الْعَٰلَمِينَ ﴿٦٤﴾

रामो बनायो[1] तथा तिमीलाई अति उत्तम वस्तुहरु खानका निम्ति प्रदान गऱ्यो ।[2] त्यही अल्लाह तिम्रो प्रभु हो; त अति शुभ अल्लाह छ समस्त जगत्को प्रभु ।

هُوَ الْحَيُّ لَا إِلَٰهَ إِلَّا هُوَ فَادْعُوهُ مُخْلِصِينَ لَهُ الدِّينَ ۗ الْحَمْدُ لِلَّهِ رَبِّ الْعَٰلَمِينَ ﴿٦٥﴾

(६५) त्यो जीवित छ जसका अतिरिक्त कोही सत्य उपास्य छैन तसर्थ तिमी विशुद्ध रुपले त्यसैको इबादत गर्दै त्यसलाई पुकार[3] सबै प्रशंसा अल्लाहकै लागि छ जो समस्त संसारको प्रभु हो ।

قُلْ إِنِّي نُهِيتُ أَنْ أَعْبُدَ الَّذِينَ تَدْعُونَ مِن دُونِ اللَّهِ لَمَّا جَاءَنِيَ الْبَيِّنَٰتُ مِن رَّبِّي وَأُمِرْتُ أَنْ أُسْلِمَ لِرَبِّ الْعَٰلَمِينَ ﴿٦٦﴾

(६६) (तपाईं) भनिदिनुस् कि मलाई उनको पूजा गर्नबाट रोकिएको छ जसलाई तिमी अल्लाहका अतिरिक्त पुकारिराखेका छौ[4] यस आधारमा कि मेरो पासमा मेरा प्रभुका प्रमाण पुगिसकेका छन् । मलाई यो आदेश दिइएको छ कि म सर्वलोकका प्रभुका आदेशका अधीन भईहालूँ ।[5]

[1]जति पनि भूमिमा प्राणी छन् ती सबैमा तिमी मानिसहरुलाई सबभन्दा सुन्दर तथा सन्तुलित अङ्गहरु भएको बनायो ।

[2]विभिन्न प्रकारका खाना तिम्रा लागि सुलभ गरायो जो स्वादिष्ट पनि छन् तथा बलबर्धक पनि ।

[3]अर्थात् जब सबैथोक दिने तथा गर्ने उही हो, अर्को कोही बनाउनमा साझी छ न अधिकारहरुमा त त्यसपछि उपास्य पनि मात्र एक अल्लाह नै छ, अर्को कोही त्यसमा साझी हुनसक्दैन । सहायताको माँग तथा गुहार पनि उसैसित गर कि त्यही सबैको गुहार तथा विनय सुन्नमा समर्थ छ । अर्को कोही पनि साधनहरुबिना कुनै कुरामा समर्थ छैन । जब यो कुरा छ त अरुहरु कसरी कष्टनिवारक तथा कार्यक्षम हुनसक्छन् ?

[4]चाहे ती पत्थरका मूर्तिहरु होऊन्, अम्बिया एवं धर्मात्मा होऊन् तथा समाधिहरुमा गाडिएका व्यक्ति होऊन्, सहायताका लागि कसैलाई नपुकार, उनका नामहरुका चढावा (भेटी) नचढाउ, उनको जप नगर, उनको भय नगर तथा न उनीसित आशाहरु बाँध, किनकि यी इबादतका भेद हुन्, जो मात्र अल्लाहको अधिकार हो ।

[5]यी तिनै धार्मिक तथा बौद्धिक तर्क हुन् जसबाट अल्लाहका उपास्य तथा पालनहार हुने कुराको प्रमाण पाइन्छ, जसको पवित्र कुरआनमा ठाउँ-ठाउँमा चर्चा गरिएको छ । इस्लामको अर्थ हो आत्म-समर्पण तथा नतमस्तक हुनु, शिर निहुराइदिनु ।

هُوَ الَّذِي خَلَقَكُم مِّن تُرَابٍ ثُمَّ مِن نُّطْفَةٍ ثُمَّ مِنْ عَلَقَةٍ ثُمَّ يُخْرِجُكُمْ طِفْلًا ثُمَّ لِتَبْلُغُوا أَشُدَّكُمْ ثُمَّ لِتَكُونُوا شُيُوخًا وَمِنكُم مَّن يُتَوَفَّىٰ مِن قَبْلُ وَلِتَبْلُغُوا أَجَلًا مُّسَمًّى وَلَعَلَّكُمْ تَعْقِلُونَ ﴿٦٧﴾

(६७) त्यही हो जसले तिमीलाई माटोबाट, अनि वीर्यबाट,[१] त्यसपछि रगतका डल्लोबाट उत्पन्न गऱ्यो, अनि पछि तिमीलाई शिशु बनाएर निकाल्दछ, अनि (तिमीलाई हुर्काउँछ कि) तिमी आफ्नो पूर्ण शक्तिलाई पुग, पछि बुढो बनिहाल ।[२] र तिमीमध्ये केहीको यसभन्दा पूर्व नै मृत्यु हुन्छ[३] (तथा त्यो तिमीलाई छाडिदिन्छ) ताकि तिमी निर्धारित आयुसम्म पुग[४] तथा ताकि तिमी सोच्न-बुझ्न सक ।[५]

अर्थात् अल्लाहका आदेशहरुका अगाडी झुकिहालूँ, त्यसबाट मुख नफर्काउनु । अगाडी पुनः तौहीद (अद्वैत) का केही प्रमाण प्रस्तुत गरिदैछन् ।

[१]अर्थात् तिम्रा परमपिता आदमलाई माटोले बनायो जो उनको सबै सन्तानलाई माटोले पैदा हुने कुरोलाई अनिवार्य बनाउँछ । अनि तत्पश्चात मानव वंश-क्रम तथा त्यसका अस्तित्वको सुरक्षाका लागि त्यसलाई वीर्यसित सम्बन्धित गरिदियो । अब प्रत्येक मानव यसै वीर्यबाट पैदा हुन्छ जो पिताको पिठ्यूँबाट माताका गर्भाशयमा गएर स्थिर हुन्छ, ईशदूत ईसाका अतिरिक्त कि उनको जन्म चमत्कारिक रुपले बिना पिता भयो, जस्तो कि पवित्र ईशवाणी कुरआनका वर्णित विवरणबाट स्पष्ट छ । तथा जसमाथि पूरा मुसलमान समुदाय एकमत छन् ।

[२]अर्थात् यी सबै स्थिति तथा अवस्थाहरुबाट गुज्रनेवाला त्यही हो जसको कोही साझेदार छैन ।

[३]अर्थात् माताका गर्भाशयमा विभिन्न अवस्थाबाट गुज्रेर बाहिर आउनुभन्दा पहिला नै माताका पेटमा केही बाल्यवस्थाहरुमा, केही युवा अवस्थामा तथा केही बृद्धावस्थाभन्दा पहिला मर्दछन् ।

[४]अर्थात् अल्लाह तआला (परमेश्वर) यो यसकारण गर्दछ ताकि जसको जति आयु अल्लाहले लेखिदिएको छ, त्यो त्यसलाई पुगोस् तथा संसारमा त्यति जीवन निर्वाह गरिहालोस् ।

[५]अर्थात् जब तिमी यी विभिन्न स्थिति एवं अवस्थाहरुमा विचार गर्नेछौ कि वीर्यबाट रक्त, अनि मासुको डल्लो, अनि शिशु, त्यसपछि युवावस्था त्यस पश्चात अर्धबैंस तथा बृद्धावस्था त तिमी जानिहाल्नेछौ कि तिम्रो प्रभु पनि एक नै छ तथा तिम्रो पूज्य पनि एक । त्यसका अतिरिक्त कोही पूज्य छैन । यसका अतिरिक्त यो पनि बुझ्नेछौ कि जो अल्लाह यो सब गर्दछ, त्यसका लागि केयामत (प्रलय) का दिन मानिसहरुलाई पुनर्जीवन गर्नु पनि कठिन छैन तथा त्यो निश्चय नै सबैलाई जीवन प्रदान गर्नेछ ।

هُوَ الَّذِي يُحْيِي وَيُمِيتُ ۖ فَإِذَا قَضَىٰ أَمْرًا فَإِنَّمَا يَقُولُ لَهُ كُن فَيَكُونُ ﴿٦٨﴾

(६८) त्यही हो जो जीवन एवं मृत्यु प्रदान गर्दछ,[1] अनि जब त्यो कुनै कार्य गर्नुको निश्चय गर्दछ त त्यसलाई केवल यो भन्दछ कि "भइहाल" अनि त्यो भइहाल्छ ।[2]

أَلَمْ تَرَ إِلَى الَّذِينَ يُجَادِلُونَ فِي آيَاتِ اللَّهِ أَنَّىٰ يُصْرَفُونَ ﴿٦٩﴾

(६९) के तिमीले उनीहरुलाई देखेनौ जो अल्लाहका आयतहरुमा झगडा गर्दछन्,[3] कि उनीहरु कता विमुख गरिन्छन् ।[4]

الَّذِينَ كَذَّبُوا بِالْكِتَابِ وَبِمَا أَرْسَلْنَا بِهِ رُسُلَنَا ۖ فَسَوْفَ يَعْلَمُونَ ﴿٧٠﴾

(७०) जुन मानिसहरुले किताबलाई झुठ्लाए तथा त्यसलाई पनि जो हामीले आफ्ना रसूलहरुका साथ पठायौं, उनलाई शीघ्र, अति शीघ्र वास्तविकताको ज्ञान भइहाल्नेछ ।

إِذِ الْأَغْلَالُ فِي أَعْنَاقِهِمْ وَالسَّلَاسِلُ يُسْحَبُونَ ﴿٧١﴾

(७१) जबकि उनका गर्दनहरुमा तौक (रिङ) हुनेछन् तथा जंजीरहरु हुनेछन्, घिसारिनेछन् ।[5]

فِي الْحَمِيمِ ثُمَّ فِي النَّارِ يُسْجَرُونَ ﴿٧٢﴾

(७२) उम्लिराखेको पानीमा तथा पछि नरक्को अग्निमा पोलिनेछन् ।[6]

[1]जीवन दिनु तथा मार्नु उसैको अधिकारमा छ, त्यो एक निर्जीव वीर्यलाई अनेक स्थितिहरुबाट गुजारेर एक जीवित मानवका रुपमा ढालिदिन्छ तथा पछि एक निर्धारित समयका पश्चात मानिसलाई मारेर मृत्युको निंद्रा सुताइदिन्छ ।

[2]त्यसका सामर्थ्यको दशा यो छ कि त्यसका शब्द كُنْ (भइहाल) सित त्यो वस्तु अस्थित्वमा आइहाल्छ जसको त्यो इच्छा गर्दछ ।

[3]इन्कार अथवा झुठ्लाउनका लागि अथवा त्यसका खण्डनका लागि ।

[4]अर्थात् प्रमाणहरुका प्रत्यक्ष तथा सत्य-स्पष्ट भइहाले पश्चात पनि उनी कसरी सत्यलाई मान्दैनन् । यो आश्चर्य व्यक्त गर्नु हो ।

[5]यो त्यो चित्रण हो जो नरक्मा यी झुठ्लाउनेहरुलाई हुनेछ ।

[6]मोजाहिद तथा मुक़ातिलको कथन छ कि उनीद्वारा नरक्को अग्नि तेज पारिनेछ अर्थात् उनीहरु त्यसको इन्धन बन्नेछन् ।

ثُمَّ قِيلَ لَهُمْ أَيْنَ مَا كُنتُمْ تُشْرِكُونَ ﴿٧٣﴾

(७३) त्यस पश्चात उनीसित सोधिनेछन् कि जसलाई तिमीले साझेदार ठहराउँथ्यौ तिनीहरु कहाँ छन् ?

مِن دُونِ اللَّهِ ۖ قَالُوا ضَلُّوا عَنَّا بَل لَّمْ نَكُن نَّدْعُو مِن قَبْلُ شَيْئًا ۚ كَذَٰلِكَ يُضِلُّ اللَّهُ الْكَافِرِينَ ﴿٧٤﴾

(७४) जो अल्लाहका अतिरिक्त थिए,[1] उनीहरुले भन्नेछन् कि उनीहरु हामीबाट गुमिए[2] बरु हामी त यसभन्दा पूर्व कसैलाई पनि पुकार्दैनथ्यौं ।[3] अल्लाह (तआला) काफ़िरहरुलाई यसैप्रकार भ्रमित गर्छ ।[4]

ذَٰلِكُم بِمَا كُنتُمْ تَفْرَحُونَ فِي الْأَرْضِ بِغَيْرِ الْحَقِّ وَبِمَا كُنتُمْ تَمْرَحُونَ ﴿٧٥﴾

(७५) यो (प्रतिफल) हो त्यस वस्तुको जो तिमी धर्तीमा अनायास (अनुचित) प्रफुल्ल हुन्थ्यो तथा (व्यर्थ) घमण्ड गर्दै हिंड्थ्यो ।[5]

ادْخُلُوا أَبْوَابَ جَهَنَّمَ خَالِدِينَ فِيهَا ۖ فَبِئْسَ مَثْوَى الْمُتَكَبِّرِينَ ﴿٧٦﴾

(७६) अब (आउ) नरक्मा सधैं रहनका लागि (त्यसका) द्वारहरुमा गइहाल; कति नराम्रो स्थान छ अहंकार गर्नेहरुका लागि ।[6]

---

[1] के उनी आज तिम्रो सहायता गर्न सक्छन् ।

[2] अर्थात् थाहा छैन कहाँ गइहालेका छन् । उनीहरुले हाम्रो के सहायता गर्नेछन् ?

[3] स्वीकारका पश्चात फेरि उनको इबादत (बन्दना) लाई नकार्नेछन् । जस्तो कि अर्को स्थानमा भन्यो ﴿وَاللَّهِ رَبِّنَا مَا كُنَّا مُشْرِكِينَ﴾ "अल्लाहको सौगन्ध ! हामी त कसैलाई साझेदार बनाउँदैनथ्यौं ।" (अल-अनआम-२३) भन्दछन् कि यी मूर्तिहरु हुने तथा उनको उपासनाको इन्कार होइन । बरु यस कुराको स्वीकार हो कि उनको इबादत, उपासना अनृत थियो किनकि त्यहाँ उनलाई स्पष्ट भइहाल्नेछ कि उनीहरु यस्ता कुराको उपासना गरिरहे जो न सुन्नसक्थे न देख्नसक्थे तथा क्षति पुऱ्याउन सक्थे न लाभ । दोस्रो स्पष्ट अर्थ यो हो कि उनीहरु शिर्कको मूलबाट इन्कार नै गर्नेछन् । (फ़तहुल क़दीर)

[4] अर्थात् यी झुठ्लाउनेहरुको जस्तै अल्लाह काफ़िरहरुलाई पनि कुमार्ग गर्दछ । अभिप्राय यो हो कि निरन्तर झुठ्लाउनु तथा कुफ्र (इन्कार), यी यस्ता कुरा हुन् कि जसबाट मानिसहरुका हृदय काला तथा मैला हुन जान्छन् । अनि उनी सधैंका लागि सत्यलाई स्वीकार गर्नुको योग्यताबाट बञ्चित हुन पुग्छन् ।

[5] अर्थात् तिम्रो पथ-भ्रष्टता यस कुराको दुष्परिणाम हो कि तिमी कुफ्र झुठ्लाउन तथा दूराचार एवं कुकर्ममा यति बढिहालेका थियौ कि उनीमाथि प्रफुल्ल हुन्थ्यो तथा घमण्ड गर्थ्यो । घमण्ड गर्नुमा अत्याधिक प्रसन्नताको प्रदर्शन छ, जो अहंकार को द्योतक हो ।

[6] यो नरक्माथि नियुक्त फरिश्ताहरु नरक्वासीहरुसित भन्नेछन् ।

فَاصْبِرْ إِنَّ وَعْدَ اللَّهِ حَقٌّ ۚ فَإِمَّا نُرِيَنَّكَ بَعْضَ الَّذِي نَعِدُهُمْ أَوْ نَتَوَفَّيَنَّكَ فَإِلَيْنَا يُرْجَعُونَ ﴿٧٧﴾

(७७) त तपाईं धैर्य राख्नुस् । अल्लाहको वचन पूर्णरुपले सत्य छ ।[1] उनीहरुलाई हामीले जुन वचन दिएका छौं तिनीहरुमध्ये केही हामी तपाईंलाई देखायौं ।[2] अथवा त्यसभन्दा पूर्व तपाईंलाई मृत्यु देऔं, उनीहरुलाई फर्काइनु त हामीतिरै हो ।[3]

وَلَقَدْ أَرْسَلْنَا رُسُلًا مِّن قَبْلِكَ مِنْهُم مَّن قَصَصْنَا عَلَيْكَ وَمِنْهُم مَّن لَّمْ نَقْصُصْ عَلَيْكَ ۗ وَمَا كَانَ لِرَسُولٍ أَن يَأْتِيَ بِآيَةٍ إِلَّا بِإِذْنِ اللَّهِ ۚ فَإِذَا جَاءَ أَمْرُ اللَّهِ قُضِيَ بِالْحَقِّ وَخَسِرَ هُنَالِكَ الْمُبْطِلُونَ ﴿٧٨﴾

(७८) निःसन्देह हामी तपाईंसित पूर्व पनि धेरै रसूल पठाइसकेका छौं, जसमध्ये केहीका (घटनाहरु) हामी तपाईंलाई सुनाइसकेका छौं तथा तिनीहरुमध्ये केहीका कथाहरु त हामीले तपाईंलाई सुनाउँदै सुनाएनौं ।[4] तथा कुनै रसूलका (वशमा यो) थिएन कि कोही चमत्कार अल्लाहको आज्ञा बिना ल्याउन सकोस् ।[5] अनि जुन समय

---

[1]के हामी काफ़िरहरुसित बदला लिनेछौं ? यो वचन शीघ्र पनि पूरा हुनसक्दछ, अर्थात् संसारमा नै हामी उनको पकड गरिहालौं अथवा अल्लाहको इच्छा अनुसार विलम्ब पनि सम्भव छ, अर्थात् हामी क़ेयामतका दिन उनीहरुलाई दण्ड दिनेछौं । तैपनि यो कुरो निश्चित छ कि यो अल्लाहको पकडबाट बाँचेर कतै जान सक्दैनन् ।

[2]अर्थात् तपाईंका जीवनमा नै उनीहरुलाई यातनाग्रस्त गरिदियून् । तथा यस्तै भयो कि अल्लाहले काफ़िरहरुसित बदला लिएर मुसलमानहरुलाई प्रसन्न गर्‍यो । बद्रका रणमा सत्तरी काफ़िर मारिए, आठ हिज्रीमा मक्का विजय भइहाल्यो तथा पछि नबी सल्लल्लाहु अलैहि वसल्लमका पवित्र जीवनमा पुरै अरबद्वीप मुसलमानहरुका अधीनमा भयो ।

[3]अर्थात् यदि नास्तिक सांसारिक पकड एवं यातनाबाट सुरक्षित रहे पनि पछि जान्छन् कहाँ ? अन्तमा मेरो पासमै आउनेछन् जहाँ उनका लागि घोर यातनाको प्रबन्ध छ ।

[4]तथा यिनी संख्यामा उनीभन्दा अधिक छन् जसको वर्णन गरिएको छ, यसकारण कि पवित्र कुर्आनमा मात्र पचीस अम्बिया तथा रसूलहरुको चर्चा तथा उनका जातिहरुका अवस्था वर्णित छन् ।

[5]آيت (आयत) सित अभिप्राय यहाँ चमत्कार तथा अद्भुत घटना छ जो पैग़म्बर को सत्यतालाई प्रमाणित गर्दछ । काफ़िर ईशदूतसित माँग गरिरहे कि हामीलाई अमुक-अमुक वस्तु देखाउ । जस्तो कि स्वयं अन्तिम ईशदूत (सल्लल्लाहु अलैहि वसल्लम) सित मक्काका काफ़िरहरुले कैयन् कुराहरुको माँग गरे, जसको विवरण सूरः बनी इस्राईल ९० देखि ९३ सम्ममा विद्यमान छ । अल्लाह तआला भनिराख्नु भएको छ कि कुनै पैग़म्बरका अधिकारमा यो थिएन कि त्यो आफ्ना

अल्लाहको आदेश आउनेछ[1] सत्यताका साथ निर्णय गरिदिइनेछ ।[2] तथा त्यस स्थानमा असत्यवादीहरु हानिमा रहनेछन् ।

(७९) अल्लाह त्यो हो जसले तिम्रा लागि पशु पैदा गरे[3] जसमध्ये केहीमाथि तिमी सवार हुन्छौ तथा केही त तिमी खान्छौ ।[4]

اَللّٰهُ الَّذِىْ جَعَلَ لَكُمُ الْاَنْعَامَ لِتَرْكَبُوْا مِنْهَا وَ مِنْهَا تَاْكُلُوْنَ ﴿٧٩﴾

जातिहरुको माँगमाथि कुनै चमत्कार बनाएर देखाउन सक्थ्यो । यो मात्र हाम्रा अधिकारमा थियो । केही नबीहरुलाई त आरम्भदेखि नै चमत्कार दिइएका थिए । केही समुदायहरुलाई उनको मागमा चमत्कार देखाइयो, केहीलाई उनको मागमा पनि देखाइएन । हाम्रो इच्छा अनुसार उनको निर्णय हुन्थ्यो । कुनै नबीका वशमा यो थिएन कि त्यो जब चाहन्थ्यो चमत्कार देखाइदिन्थ्यो । यसमा ती मानिसहरुको खुल्ला खण्डन हुन्छ, जो केही औलिया (धर्मात्मा) तिर यी कुरा सम्बन्धित गर्दछन् कि उनी जब चाहन्थे तथा जस्तो चाहन्थे अद्भुत कुराहरु तथा चमत्कार देखाइदिन्थे । जस्तै शेष अब्दुल क़ादिर जिलानीका विषयमा भनिन्छ । यी सबै मनगढन्त कथा, कहानीहरु हुन् । जब अल्लाहले पैग़म्बरहरुलाई यो अधिकार दिएन, जसलाई आफ्नो सत्यताको प्रमाण हेतु यसको आवश्यकता पनि थियो त कुनै वली (धर्मात्मा) यो अधिकार कसरी प्राप्त हुनसक्दछ ? विशेषरुपले जबकि वलीलाई यसको आवश्यकता पनि छैन । किनकि नबीको नबूअत (दूतत्व) प्रति विश्वास गर्नु आवश्यक हुन्छ, यसकारण चमत्कार उनको आवश्यकता थियो । किन्तु अल्लाहको हिक्मत तथा इच्छा यसको अभियाची थिएन, यसकारण यो शक्ति कुनै नबीलाई दिइएन । वलीलाई वली हुने कुरोमा विश्वास राख्नु अनिवार्य छैन । अतः उनलाई चमत्कार तथा विचित्र घटनाहरुको आवश्यकता नै छैन । अल्लाह तआला उनलाई यो अधिकार अनावश्यक किन दिन सक्छ ?

[1]अर्थात् लोक तथा परलोकमा जब उनको यातनाको निर्धारित समय आउनेछ ।

[2]अर्थात् उनका बीच न्यायपूर्वक निर्णय गरिदिइनेछ । सत्यवादीहरुलाई मोक्ष तथा मिथ्यावादीहरुलाई दण्ड ।

[3]अल्लाह आफ्ना असंख्य उपकारहरुमध्ये केहीको चर्चा गरिराखेको छ । चौपायाहरु (पशु) सित अभिप्राय ऊँट, गाई, बाखा तथा भेंडाहरु हुन् । यी भाले-पोथी गरी आठ छन्, जस्तो कि सूरः अल-अन्आम-१४३ तथा १४४ मा छ ।

[4]यी सवारीका काममा पनि आउँछन् । तिनको दूध पनि पिइन्छ, (जस्तै बाखा, गाईहरु तथा ऊँटनीको दूध । यिनको मासु मानिसको रुचिकर खाद्य हो तथा बोझ लाद्नुको काम पनि उनीबाट लिइन्छ ।

وَلَكُمْ فِيهَا مَنَافِعُ وَلِتَبْلُغُوا عَلَيْهَا حَاجَةً فِي صُدُورِكُمْ وَعَلَيْهَا وَعَلَى الْفُلْكِ تُحْمَلُونَ ﴿٨٠﴾

(८०) तथा अन्य पनि तिम्रा लागि त्यसमा धेरै लाभ छन्[1] ताकि आफ्नो हृदयमा लुकेका आवश्यकताहरुलाई तिनैमाथि सवारी गरी तिमीले प्राप्त गर तथा यी पशुहरुमाथि एवं डुङ्गाहरुमा तिमी सवार गराइनेछौ ।[2]

وَيُرِيكُمْ آيَاتِهِ فَأَيَّ آيَاتِ اللَّهِ تُنكِرُونَ ﴿٨١﴾

(८१) तथा (अल्लाह) तिमीलाई आफ्ना निशानीहरु देखाउँदै गइराखेको छ,[3] त तिमी अल्लाहका कुन-कुन निशानीहरुलाई अस्वीकार गर्दैरहनेछौ ।[4]

أَفَلَمْ يَسِيرُوا فِي الْأَرْضِ فَيَنظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِينَ مِن قَبْلِهِمْ كَانُوا أَكْثَرَ مِنْهُمْ وَأَشَدَّ قُوَّةً وَآثَارًا فِي الْأَرْضِ فَمَا أَغْنَىٰ عَنْهُم مَّا كَانُوا يَكْسِبُونَ ﴿٨٢﴾

(८२) के उनीहरुले धर्तीमा भ्रमण गरेर आफूभन्दा पूर्वका मानिसहरुको परिणाम देखेनन्[5] जो यिनीभन्दा संख्यामा अधिक थिए, शक्तिमा कठोर तथा धर्तीमा धेरै स्मृतिहरु छोडेका थिए ।[6] (परन्तु उनीबाट गरिएका कार्यहरुले उनलाई अलिकति पनि लाभ पुऱ्याएन ।[7]

[1]जस्तै यी सबैका ऊन तथा भुत्ला एवं छालाहरुबाट कैयन् वस्त्रहरु बनाइन्छन् । यिनका दूधहरुबाट घ्यू, नौनी, पनीर आदि पनि बन्दछन् ।

[2]यिनीसित अभिप्राय बच्चा तथा महिलाहरु हुन्, जसलाई हौदज़ सहित ऊट आदिमाथि सवार गरिन्थ्यो ।

[3]जो त्यसका सामर्थ्य तथा एकताको बोध गराउँछन् तथा यो लक्षण विश्वमा होइन तिमीभित्र पनि विद्यमान छन् ।

[4]यी यति स्पष्ट, साधारण तथा अधिक छन् जसलाई कोही निवर्ती इन्कार गर्नुको सामर्थ्य राख्दैन । यो प्रश्न नकारात्मक छ ।

[5]अर्थात् जुन समुदायहरुले अल्लाहको अवज्ञा गरे तथा त्यसका रसूलहरुलाई झुठ्लाए, यो उनका बस्तीहरुका अवशेषलाई त हेर्नुस् जो यिनका क्षेत्रमा नै छन् कि उनको के दुष्परिणाम भयो ।

[6]अर्थात् भवन, उद्योग तथा खेतीहरुका रुपमा उनका अवशेष स्पष्ट गर्दछन् कि उनी कारीगरीका क्षेत्रमा पनि तिमीभन्दा बढी थिए ।

[7]فَمَا أَغْنَىٰ मा مَا प्रश्नवाची पनि हुनसक्छ तथा नकारात्मक पनि । नकारात्मकको भावार्थ त अनुवादबाट स्पष्ट छ । प्रश्नवाचीका आधारमा अभिप्राय यो हुनेछ, उनलाई के भयो लाभ पुऱ्यायो ?

فَلَمَّا جَآءَتْهُمْ رُسُلُهُمْ بِالْبَيِّنٰتِ فَرِحُوْا بِمَا عِنْدَهُمْ مِّنَ الْعِلْمِ وَحَاقَ بِهِمْ مَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ﴿٨٣﴾

(८३) त जतिखेर उनका पासमा उनका रसूल स्पष्ट निशानीहरु लिएर आए त यिनीहरु आफ्ना पासका ज्ञानमाथि घमण्ड गर्नथाले।[१] अन्तमा जुन वस्तुलाई उपहासमा उडाइराखेका थिए, त्यही उनीमाथि फर्क्यो ।

فَلَمَّا رَاَوْا بَاْسَنَا قَالُوْٓا اٰمَنَّا بِاللّٰهِ وَحْدَهٗ وَكَفَرْنَا بِمَا كُنَّا بِهٖ مُشْرِكِيْنَ ﴿٨٤﴾

(८४) अनि हाम्रो यातना देख्नासाथ भन्नलागे कि अल्लाह एकमाथि हामीले ईमान स्वीकार गऱ्यौं तथा ज-जसलाई हामीले त्यसको साझीदार बनाइराखेका थियौं, हामीले ती सबैबाट इन्कार गऱ्यौं ।

فَلَمْ يَكُ يَنْفَعُهُمْ اِيْمَانُهُمْ لَمَّا رَاَوْا بَاْسَنَا ؕ سُنَّتَ اللّٰهِ الَّتِيْ قَدْ خَلَتْ فِيْ عِبَادِهٖ ۚ وَخَسِرَ هُنَالِكَ الْكٰفِرُوْنَ ﴿٨٥﴾

(८५) परन्तु हाम्रो यातना देखिहाले पश्चात उनका ईमानले उनलाई लाभ दिएन । अल्लाहले आफ्नो यही नियम निर्धारित गरेको छ जो उसका भक्तहरुमा निरन्तर चलिआइरहेको छ;[२] तथा त्यस स्थानमा काफ़िर ख़राब (तथा कमजोर) भए ।[३]

अभिप्राय त्यही हो उनको कमाई उनका कुनै काम आएन ।

[१] عِلْم (ज्ञान) सित अभिप्राय उनका स्वयं कल्पित विचार, भ्रम तथा शंका एवं झूठा दावीहरु हुन् । उनीहरुलाई उपहास स्वरुप ज्ञान भनिएको छ, किनकि उनी तिनलाई तर्क ठान्दथे । उनका विचारानुसार यस्तो भन्यो । अभिप्राय यो हो कि अल्लाह तथा रसूलका कुराको तुलनामा यिनी आफ्ना काल्पनिक विचार तथा भ्रमहरुमाथि गर्व गर्दैरहे । अथवा ज्ञानसित अभिप्राय सांसारिक ज्ञान हो । यो अल्लाहका आदेश अनिवार्यताहरुका अगाडी यसैलाई महत्व दिन्छन् ।

[२]अर्थात् यो अल्लाहको नियम चलिआइराखेको छ कि प्रकोप देखे पश्चात तौबा (पश्चाताप) तथा ईमान स्वीकार छैन । यो विषय कुरुआनका अनेक स्थानहरुमा वर्णित भएको छ ।

[३]अर्थात् प्रकोप दर्शनका पश्चात उनीमाथि व्यक्त भइहाल्यो कि अब दण्ड एवं विनाश बाहेक हाम्रा भाग्यमा केही छैन ।

## सूरतु हा.मीम.अस्सजदः-४१

سُورَةُ حٰمٓ السَّجْدَة

सूरः हा.मीम.अस्सजदः* मक्कामा अवतरित भएको तथा यसमा चौवन्न आयतहरु तथा छ रुकूअ छन्।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ।

حٰمٓ ۝١

(१) हा.मीम.।

تَنْزِيْلٌ مِّنَ الرَّحْمٰنِ الرَّحِيْمِ ۝٢

(२) अवतरित अत्यन्त कृपालु, अत्यन्त दयालुको तर्फबाट।

---

*यस सूरः को अर्को नाम "फुस्सेलत" हो। यसको अवतरणको विषयमा भनिएको छ कि एकपटक कुरैशका प्रमुखहरुले परस्पर परामर्श गरे कि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) का अनुयायीहरुको संख्या दिनहुँ बढ्दै गइराखेको छ। हामीले उनलाई रोक्नका निम्ति अवश्य केही गर्नुपर्छ। उनीहरुले सबभन्दा अधिक भाषा शैलीका व्यक्ति 'उतबा बिन रबीआ' को चुनाव गरे ताकि त्यो उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) सित कुरा गरोस्। त्यो उहाँको सेवामा गयो तथा उहाँमाथि अरबहरुमा फूट पैदा गर्नुको आरोप लगाएर प्रस्ताव राख्यो कि यदि यस नयाँ आमन्त्रणबाट तपाईंको उद्देश्य धन-सम्पत्ति प्राप्त गर्नु हो भने त्यो हामी एकत्रित गरिदिन्छौं, नेतृत्व तथा प्रमुखता बनाउनु चाहनुहुन्छ भने हामीले तपाईंलाई आफ्नो प्रमुख तथा अगुवा मानिहाल्छौं, कुनै सुन्दरीसित विवाह गर्न चाहनुहुन्छ भने एउटी होइन यस्तो दसवटा नारीहरुको व्यवस्था गरिदिन्छौं तथा यदि तपाईंमाथि भूत-प्रेतको प्रभाव छ जसका कारण तपाईं हाम्रा देवताहरुलाई नराम्रो भन्नुहुन्छ भने आफ्ना व्यय (खर्च) मा तपाईंको उपचार गराइदिन्छौं। उहाँले त्यसको सबैकुरा सुनेर यस सूरःको पाठ त्यसका अगाडी गर्नुभयो जसबाट त्यो निकै प्रभावित भयो। त्यसले फर्केर गई कुरैशका प्रमुखहरुलाई भन्यो कि जुन कुरो त्यो प्रस्तुत गर्दछ, त्यो जादू, ज्योतिष, काव्य एवं कविता होइन। अभिप्राय उहाँका आमन्त्रणमा कुरैशका प्रमुखहरुलाई चिन्तन तथा मननको आमन्त्रण दिनु थियो। किन्तु उनी सोच-विचार के गर्दथे ? उल्टै उतबामाथि आरोप लगाइदिए कि तिमी पनि त्यसका जादूका प्रभावमा आइहाल्यो। यो वर्णन विभिन्न प्रकारले इतिहासकार तथा भाष्यकारहरुले वर्णित गरेका छन्। इमाम इब्ने कसीर तथा इमाम शौकानीले पनि यिनलाई अनुकृत गरेका छन्। इमाम शौकानी भन्नुहुन्छ, "यी वर्णन यस कुरालाई भन्दछन् कि कुरैशको सभा अवश्य भयो। उनीहरुले उतबालाई वार्तालापका लागि पठाए तथा नबी सल्लल्लाहु अलैहि वसल्लमले त्यसलाई यस सूरःको प्रारम्भिक भाग सुनाउनु भयो।"

كِتٰبٌ فُصِّلَتْ اٰيٰتُهٗ قُرْاٰنًا عَرَبِيًّا لِّقَوْمٍ يَّعْلَمُوْنَ ۝٣

(३) (यस्तो) किताब हो जसका आयतहरु (सूत्र) को स्पष्ट व्याख्या गरिएको छ[१] (यस अवस्थामा कि) कुर्आन अरबी भाषामा छ[२] त्यस समुदायका लागि जो जान्दछ ।[३]

بَشِيْرًا وَّنَذِيْرًا ۚ فَاَعْرَضَ اَكْثَرُهُمْ فَهُمْ لَا يَسْمَعُوْنَ ۝٤

(४) शुभ-सूचना सुनाउने तथा चेतावनी दिनेवाला छ,[४] तैपनि उनीहरुका अधिकतर विमुख भइहाले तथा उनी सुन्दै सुन्दैनन् ।[५]

وَقَالُوْا قُلُوْبُنَا فِيْٓ اَكِنَّةٍ مِّمَّا تَدْعُوْنَآ اِلَيْهِ وَفِيْٓ اٰذَانِنَا وَقْرٌ وَّمِنْۢ بَيْنِنَا وَبَيْنِكَ حِجَابٌ فَاعْمَلْ اِنَّنَا عٰمِلُوْنَ ۝٥

(५) तथा उनीहरुले भने कि तिमी जसतिर हामीलाई बोलाइराखेका छौ हाम्रा हृदय त त्यसबाट पर्दा (ओभ्रुल) मा छन्,[६] हाम्रा कानहरुमा बोभ्रु छ (अथवा तिनी सुन्दैनन्)[७] तथा हामी र तिमीमा एउटा पर्दा (आवरण) छ । तसर्थ तिमी अब आफ्ना कार्य गर्दैजाउ हामी पनि निःसन्देह कार्य गर्नेवाला छौं ।[८]

---

[१]अर्थात् के हलाल (वैध) छ तथा के हराम (अवैध) ? अथवा आज्ञापालन के हो तथा अवज्ञा के ? अथवा पुण्यका कर्म कुन हुन् तथा यातनाका कुन ?

[२]यो अवस्थावाचक हो अर्थात् त्यसका शब्द अरबी हुन्, जसका अर्थ विस्तृत एवं स्पष्ट छन् ।

[३]अर्थात् जो अरबी भाषाका अर्थ र वाक्यशैलीलाई बुभ्रुदछन् ।

[४]ईमान भएका तथा सत्कर्मीहरुलाई शुभ-सूचना सुनाउनेवाला तथा मुशरेकीन एवं मिथ्यारोपण गर्नेहरुलाई नरकको यातनासित तर्साउनेवाला ।

[५]अर्थात् सोच-विचार तथा चिन्तन एवं बोधका उद्देश्यले सुन्दैनन् कि जसबाट लाभ होस् । यही कारण हो कि उनीमध्ये अधिकांश सन्मार्गबाट बञ्चित ।

[६]أَكِنَّة (अकिन्नह) كِنَانٌ (किनान) को बहुवचन हो, पर्दा । अर्थात हाम्रा हृदय यस कुरावाट पर्दाहरुमा छन् कि हामी तिम्रो तौहीद (अद्वैत) तथा ईमानका आमन्त्रणलाई बुभ्रु सकौं ।

[७]وَقْرٌ (वक्र) को शाब्दिक अर्थ बोभ्रु हो । जहाँ अभिप्राय (बहिरोपन) हो जो सत्य सुन्नमा बाधक थियो ।

[८]अर्थात् हाम्रा तथा तिम्रा बीच यस्तो पर्दाबाधक छ कि तिमी जे भन्दछौ त्यो सुन्नै सक्दैनौं तथा जे गर्दछौ त्यसलाई देख्नै सक्दैनौं । यसकारण तिमी हामीलाई हाम्रो स्थितिमा छाडिदेउ तथा हामी तिमीलाई तिम्रो अवस्थामा छाडिदेऔं । तिमी हाम्रो धर्ममा कर्म गर्दैनौ, हामी तिम्रा धर्मानुसार कर्म गर्न सक्दैनौं ।

قُلْ إِنَّمَآ أَنَا۠ بَشَرٌ مِّثْلُكُمْ يُوحَىٰٓ إِلَىَّ أَنَّمَآ إِلَٰهُكُمْ إِلَٰهٌ وَٰحِدٌ فَٱسْتَقِيمُوٓا۟ إِلَيْهِ وَٱسْتَغْفِرُوهُ ۗ وَوَيْلٌ لِّلْمُشْرِكِينَ ﴿٦﴾

(६) (तपाईं) भनिदिनुस् कि म त तिमीजस्तै मनुष्य हुँ, ममाथि प्रकाशना गरिन्छ कि तिमी सबैको पूज्य केवल एक अल्लाह नै हो ।[1] तसर्थ तिमी उसतिर ध्यान केन्द्रित गरिहाल तथा त्यससित पापहरुको क्षमा चाह, तथा ती मूर्तिपूजकहरुका लागि (ठूलै) खराबी छ ।

ٱلَّذِينَ لَا يُؤْتُونَ ٱلزَّكَوٰةَ وَهُم بِٱلْءَاخِرَةِ هُمْ كَٰفِرُونَ ﴿٧﴾

(७) जो ज़कात दिंदैनन्[2] तथा आख़िरतलाई पनि अस्वीकार गर्नेहरु नै रहन्छन् ।

إِنَّ ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ لَهُمْ أَجْرٌ غَيْرُ مَمْنُونٍ ﴿٨﴾

(८) नि:सन्देह जो मानिस ईमान स्वीकार गरे तथा राम्रा कर्म गरे, उनका लागि अनन्त प्रतिफल छ ।[3]

قُلْ أَئِنَّكُمْ لَتَكْفُرُونَ بِٱلَّذِى خَلَقَ ٱلْأَرْضَ فِى يَوْمَيْنِ وَتَجْعَلُونَ لَهُۥٓ أَندَادًا ۚ ذَٰلِكَ رَبُّ ٱلْعَٰلَمِينَ ﴿٩﴾

(९) (तपाईं) भनिदिनुस् कि के तिमी त्यस (अल्लाह) को इन्कार गर्दछौ तथा तिमी जसका साझीदार निर्धारित गर्दछौ जसले दुई दिनमा धर्तीलाई पैदा गऱ्यो[4] सर्वलोकको प्रभु

[1]अर्थात् मेरो तथा तिम्रो बीच कुनै अन्तर छैन ईश्वरीय प्रकाशना बाहेकको, अनि यो दूरी तथा पर्दा किन ? यसका अतिरिक्त जो एकेश्वरको दावत (आमन्त्रण) दिइराखेको छु, त्यो पनि यस्तो छैन कि समझ-बुझमा आउन नसकोस्, अनि त्यसबाट मुख फर्काउनु किन ?

[2]यो सूर: मक्कामा अवतरित भयो । ज़कात (धर्मदान) हिज़रतका दोस्रो वर्ष अनिवार्य भयो । यसकारण यसबाट अभिप्राय या त दान छ जसको आदेश मुसलमानहरुलाई मक्कामा पनि दिइन्थ्यो, जुनप्रकार पहिला मात्र प्रात: एवं सन्ध्याको नमाज़हरुको आदेश थियो, पुन: हिज़रतभन्दा डेढ वर्ष पूर्व मेराजको रात्रिमा पाँच अनिवार्य नमाज़हरुको आदेश भयो । अथवा ज़कातसित यहाँ तात्पर्य कल्मये शहादत छ जसबाट मानव मन शिर्क (मिश्रणबाद) गन्दगीहरुबाट पवित्र हुनजान्छ । (इब्ने कसीर)

[3] أجرٌ غيرُ ممنون को त्यही भावार्थ हो जो (عطاءً غيرَ مجذوذ -हूद, १०८) को छ, अर्थात् अन्त नहुने प्रतिफल ।

[4]पवित्र कुरआनका अनेक स्थानहरुमा वर्णन गरिएको छ कि अल्लाहले आकाशहरु तथा धर्तीलाई छ दिनमा पैदा गऱ्यो । यहाँ त्यसको केही विवरण दिएको छ । भन्नुभयो, 'धर्तीलाई दुई दिनमा बनायो' यसबाट अभिप्राय हो يوم الأحد (रविवार) तथा يوم الاثنين (सोमबार) । सूर: नाज़िआतमा भनिएको छ ﴿وَٱلْأَرْضَ بَعْدَ ذَٰلِكَ دَحَىٰهَآ﴾ जसबाट प्रत्यक्ष रुपल

त्यही हो ।

وَجَعَلَ فِيهَا رَوَاسِيَ مِن فَوْقِهَا وَبَٰرَكَ فِيهَا وَقَدَّرَ فِيهَآ أَقْوَٰتَهَا فِيٓ أَرْبَعَةِ أَيَّامٍ سَوَآءً لِّلسَّآئِلِينَ ⑩

(१०) तथा उसले धर्तीमा त्यसको माथिबाट नै पर्वत उत्पन्न गरिदियो,[1] त्यसमा समृद्धि प्रदान गऱ्यो[2] तथा त्यसमा बस्नेहरुका आहारको पनि निर्धारण त्यसैमा गरिदियो[3] केवल चार दिनमा नै,[4] प्रश्न गर्नेहरुका लागि

ज्ञात हुन्छ कि धर्तीलाई आकाशका पश्चात बनाइयो, जबकि यहाँ धर्तीको सृजनाको चर्चा आसमानको सृष्टिभन्दा पहिला गरियो। आदरणीय इब्ने अब्बासले यसको व्याख्या यसप्रकार गर्नुभएको छ कि उत्पत्ति र वस्तु हो तथा دحو (ओछ्यानु तथा फिजाउनु) अलग्गै कुरो हो जस्तो कि पहिला पनि वर्णन गरिएको छ। तथा دحى (दहा) को अभिप्राय हो कि धर्तीलाई आवास योग्य बनाउनका लागि त्यसमा जलका भण्डार राखिए । त्यसलाई उपजको आवश्यकताको कोष बनाइयो । ﴿أَخْرَجَ مِنْهَا مَآءَهَا وَمَرْعَاهَا﴾ त्यसमा पर्वत त्यसका चुचुरा तथा पाषाण (ढुङ्गा) राखिए। यो काम आकाशको रचनाका पश्चात अर्को दुई दिनमा गरियो। यसप्रकार धर्ती तथा त्यससित सम्बन्धित कुराहरुको रचना गरियो । यसप्रकार धर्ती तथा त्यससित सम्बन्धित कुराहरुको रचना चार दिनमा पूरा भयो । (सहीह बुखारी, व्याख्या हा.मीम.अस्सजदः)

[1]अर्थात् पर्वतहरुलाई धर्तीबाटै पैदा गरी उनको माथि गाडियो कि धर्ती यताउता नचलोस् ।

[2]यो संकेत हो पानीको अधिकता अनेक प्रकारको जीविका खनिज पदार्थ एवं अन्य यसैप्रकारका वस्तुहरुतिर । यो धर्तीको समृद्धि हो भलाईको प्रचुरताको नाम नै समृद्धि (बरकत) हो ।

[3] أقوات (अक्वात) قوت कूत (आहार, खाद्य) को बहुवचन हो। अर्थात् धर्तीका सबै बस्ने सृष्टिका आहार त्यसमा राखिदियो अथवा त्यसको व्यवस्था गरिदियो । अल्लाहको यस योजना तथा व्यवस्थाको काम यति विस्तृत छ कि कुनै जिभ्राले त्यसको वर्णन गर्न सक्दैन, कुनै कलमले त्यसलाई लेख्न सक्दैन, कुनै क्यालकुलेटर ले त्यसलाई गन्न सक्दैन। केही विद्वानहरुले यसको अभिप्राय यो लिएका छन् कि प्रत्येक भूभागमा यस्ता वस्तुहरु पैदा गरिदियो जो अरु भूभागमा उब्जन सक्दैनन् ताकि प्रत्येक क्षेत्रको यो विशेष उपज ती क्षेत्रहरुको व्यापार तथा जीविका आधार बन्न जाऊन् । यो भावार्थ पनि आफ्नो स्थानमा सही तथा बिल्कुल यथार्थ छ ।

[4]अर्थात् उत्पत्तिका पूर्वका दुई दिन तथा धर्ती फिजाउनुका पश्चात दुई दिन, यो सब मिलाएर चार दिन भए जसमा यी सबै कार्य पूरा भए ।

समानरुपले ।[1]

ثُمَّ اسْتَوٰٓى اِلَى السَّمَآءِ وَهِيَ دُخَانٌ فَقَالَ لَهَا وَلِلْاَرْضِ ائْتِيَا طَوْعًا اَوْ كَرْهًا ۗ قَالَتَآ اَتَيْنَا طَآئِعِيْنَ ﴿١١﴾

(११) अनि आकाशतिर उच्चय भयो तथा त्यो धूँवा (जस्तो) थियो, त त्यसलाई तथा धर्तीलाई आदेश दियो कि तिमी दुबै आउ, चाहेर वा नचाहेर नै[2] दुबैले निवेदन गरे कि हामी स्वेच्छापूर्ण उपस्थित छौं ।

فَقَضٰىهُنَّ سَبْعَ سَمٰوَاتٍ فِيْ يَوْمَيْنِ وَاَوْحٰى فِيْ كُلِّ سَمَآءٍ اَمْرَهَا ۗ وَزَيَّنَّا السَّمَآءَ الدُّنْيَا بِمَصَابِيْحَ ۖ وَحِفْظًا ۗ ذٰلِكَ تَقْدِيْرُ الْعَزِيْزِ الْعَلِيْمِ ﴿١٢﴾

(१२) त दुई दिनमा सात आकाश बनाइदियो, प्रत्येक आकाशमा त्यसका अनुसार आदेशको प्रकाशना पठाइदियो[3] तथा हामीले सांसारिक आकाशलाई ताराहरुले सुशोभित गऱ्यौं तथा रक्षा गऱ्यौं ।[4] यो योजना अल्लाह प्रभुत्वशाली सर्वज्ञाताको हो ।

فَاِنْ اَعْرَضُوْا فَقُلْ اَنْذَرْتُكُمْ صٰعِقَةً مِّثْلَ صٰعِقَةِ عَادٍ وَّثَمُوْدَ ﴿١٣﴾

(१३) अब पनि यिनी विमुख हुन्छन् भने म तिमीलाई त्यस तडित (आकाशीय प्रकोप) सित तर्साउँछौं जो आद समुदाय एवं समूद समुदायका तडितका समान हुनेछ ।[5]



[1] سَــوَآءً (सवाअ) को अर्थ हो पूरै चार दिनमा, अर्थात् प्रश्न गर्नेहरुलाई बताइदिनुस् कि रचना तथा विस्तारको काम चार दिनमा भयो अथवा पूरा अथवा बराबर उत्तर हो प्रश्नकर्ताहरुका लागि ।

[2] यो आउनु कुन प्रकार थियो यसको स्थिति भन्न सकिदैन ? यी दुबै अल्लाहका पास आए जस्तो उसले चाहयो । केही विद्वानहरुले यसको भावार्थ यो लिएका छन् कि मेरा आदेशको पालन गर । उनीहरुले भने, ठीक छ हामी उपस्थित छौं अल्लाहले आकाशलाई आदेश दियो कि सूर्य, चन्द्रमा तथा ताराहरु निकालिदेउ तथा पृथ्वीसित भन्यो कि स्रोत प्रवाहित गरिदेउ एवं फल उमारिदेउ । (इब्ने कसीर) अथवा भावार्थ यो हो कि तिमी दुवै अस्तित्वमा आइहाल ।

[3] अर्थात् स्वयं आकाशहरुलाई अथवा तिनमा आबाद फरिश्ताहरुलाई विशेष कार्यहरु तथा स्मरण एवं महिमागानका लागि प्रतिबद्ध गरिदियो ।

[4] अर्थात् शैतानबाट सुरक्षा, जस्तो कि अन्य स्थानमा व्याख्या छ । ताराहरुको एउटा तेस्रो उद्देश्य अरु स्थानमा اهتداء (बाटो पत्ता लगाउनु) पनि वर्णन गरिएको छ । (अन्नहल-१६)

[5] अर्थात् किनकि तिनी हाम्रै समान मनुष्य हो, यसकारण हामी तिमीलाई ईशदूत (नबी) मान्न सक्दैनौं । अल्लाहलाई नबी पठाउन चाहन्छ भने फरिश्ताहरुलाई पठाउँछ न कि मानवलाई ।

اِذْ جَآءَتْهُمُ الرُّسُلُ مِنْۢ بَيْنِ اَيْدِيْهِمْ وَمِنْ خَلْفِهِمْ اَلَّا تَعْبُدُوْٓا اِلَّا اللّٰهَ ۭ قَالُوْا لَوْ شَاۗءَ رَبُّنَا لَاَنْزَلَ مَلٰۗىِٕكَةً فَاِنَّا بِمَآ اُرْسِلْتُمْ بِهٖ كٰفِرُوْنَ ⑭

(१४) उनका पासमा जब उनका अगाडी-पछाडीबाट पैग़म्बर आए ताकि तिमी अल्लाहका अतिरिक्त कसैको इबादत नगर, त उनीहरुले उत्तर दिए कि हाम्रो प्रभु चाहेको भए फरिश्ताहरुलाई पठाउँथ्यो; हामी त तिम्रो रिसालतलाई पूर्णरुपले अस्वीकार गर्दछौं ।

فَاَمَّا عَادٌ فَاسْتَكْبَرُوْا فِي الْاَرْضِ بِغَيْرِ الْحَقِّ وَقَالُوْا مَنْ اَشَدُّ مِنَّا قُوَّةً ۭ اَوَلَمْ يَرَوْا اَنَّ اللّٰهَ الَّذِيْ خَلَقَهُمْ هُوَ اَشَدُّ مِنْهُمْ قُوَّةً ۭ وَكَانُوْا بِاٰيٰتِنَا يَجْحَدُوْنَ ⑮

(१५) त जब आदले अकारण धर्तीमा अहंकार प्रारम्भ गरे तथा भन्नलागे कि हामीभन्दा शक्तिशाली को छ ?[1] के उनीहरुले यो देखेनन् कि जसले उनीहरुलाई पैदा गऱ्यो त्यो उनीभन्दा सर्वशक्तिशाली छ ।[2] उनीहरु (अन्तसम्म) हाम्रा आयतहरुमाथि[3] को इन्कार नै गरिरहे ।

فَاَرْسَلْنَا عَلَيْهِمْ رِيْحًا صَرْصَرًا فِيْٓ اَيَّامٍ نَّحِسَاتٍ لِّنُذِيْقَهُمْ

(१६) अन्तमा हामीले उनीमाथि एउटा तीव्र गति भएको आँधि (हूरी)[4] अशुभ दिनहरुमा[5] पठाइदियौं कि उनीहरुलाई

[1]यस वाक्यखण्डसित उनको अभिप्राय यो थियो कि उनी यातना रोकिहाल्नुमा समर्थ छन् किनकि उनी अग्ला तथा अति बलवान थिए । यो उनीहरुले त्यस समय भने जब उनका पैग़म्बर आदरणीय हूद (अलैहिस्सलाम) ले उनलाई सावधानी तथा चेतावनीका लागि अल्लाहका प्रकोपसित तर्साए ।

[2]अर्थात् के उनी अल्लाहभन्दा पनि अधिक बलवान छन्, जसले उनलाई पैदा गऱ्यो तथा उनलाई शक्ति तथा बल दियो ? के उनलाई रच्नुका पश्चात त्यसको शक्ति तथा बल समाप्त भइहाल्यो ? यो प्रश्न इन्कार तथा झपारका लागि छ ।

[3]ती चमत्कारहरुको जो नबीहरुलाई हामीले प्रदान गरेका थियौं, अथवा ती प्रमाणहरुको जो अम्बियाका साथ उतारिएका थिए अथवा ती उत्पत्तिका लक्षणहरुको जो विश्वमा फैलिएका छन् तथा छरिएका छन् ।

[4]صَرْصَر यो صَرَّةٌ बाट बनेको हो जसको अर्थ आवाज हो, अर्थात यस्तो वायु जसमा तीव्र ध्वनि थियो । अर्थात् अति तीव्र तथा प्रचण्ड वायु जसमा ध्वनि पनि हुन्छ । केही ज्ञाताहरु भन्छन् कि यो صر बाट हो, जसको अर्थ "शीत" हो । अर्थात् यस्तो वायु जो अग्निका समान जलाइदिन्छ । وَالحقّ أنها متّصفة بجميع ذلك "सत्य यो हो कि त्यस आयुमा यी सबै गुण थिए ।" (इब्ने कसीर)

[5]نَحِسات को अनुवाद केही विद्वानहरुले निरन्तर गरेका छन् किनकि यो वायु सात रात तथा आठ दिनसम्म निरन्तर चलिरहयो । केही ज्ञाताले प्रचण्ड, केहीले धूल-कण भएको तथा केहीले अशुभ गरेका छन् ।

عَذَابَ الْخِزْيِ فِي الْحَيٰوةِ الدُّنْيَا ۖ وَلَعَذَابُ الْآخِرَةِ أَخْزٰى ۖ وَهُمْ لَا يُنصَرُونَ ⑯

सांसारिक जीवनमा अपमान भएका प्रकोपको स्वाद चखाइदेऔं । (विश्वास गर) कि आख़िरतको यातना यसभन्दा अत्याधिक अपमान भएको छ तथा उनीहरुलाई सहायता गरिने छैन ।

وَأَمَّا ثَمُودُ فَهَدَيْنَاهُمْ فَاسْتَحَبُّوا الْعَمَىٰ عَلَى الْهُدَىٰ فَأَخَذَتْهُمْ صَاعِقَةُ الْعَذَابِ الْهُونِ بِمَا كَانُوا يَكْسِبُونَ ⑰

(१७) तथा समूदको कुरामा त हामीले उनको पनि मार्गदर्शन गऱ्यौं[1] तैपनि उनीहरुले मार्गदर्शनमाथि अन्धोपनालाई महत्व दिए,[2] जसका कारण उनीहरुलाई (पूर्णरुपले) अपमानको यातनाको कडक (चर्को स्वर) ले उनका कुकर्महरुका कारण समातिहाल्यो ।[3]

وَنَجَّيْنَا الَّذِينَ آمَنُوا وَكَانُوا يَتَّقُونَ ⑱

(१८) तथा ईमान्दार तथा संयमीहरुलाई हामीले बचाइहाल्यौं ।

وَيَوْمَ يُحْشَرُ أَعْدَاءُ اللَّهِ إِلَى النَّارِ فَهُمْ يُوزَعُونَ ⑲

(१९) तथा जुन दिन[4] अल्लाहका शत्रु नरकतिर ल्याइनेछन् तथा ती (सबै) लाई एकत्रित गरिदिइनेछ ।[5]

अन्तिम अनुवादको अभिप्राय यो हुनेछ कि यो दिन जसमा उनीमाथि जोड्दार हावाको हूरी आयो, उनका लागि अति अशुभ सिद्ध भए । यो होइन कि दिन नै सामान्यत: अशुभ छन् ।

[1]अर्थात् उनलाई तौहीद (अद्वैत) को आमन्त्रण गऱ्यौं तथा उनका तर्क उनका सामु स्पष्ट गऱ्यौं तथा उनका पैग़म्बर (सन्देशवाहक) स्वालेह (अलैहिस्सलाम) द्वारा उनीमाथि तर्कको पूर्ति गऱ्यौं ।

[2]अर्थात् उनीहरुले विरोध तथा झुठ्लाउने काम गरे यहाँसम्मकि त्यस ऊटनीलाई वध गरिहाले जो चमत्कार स्वरुप उनको इच्छामा चट्टानबाट प्रकट गरिएको थियो तथा पैग़म्बरको सच्चाइको प्रमाण थियो ।

[3] صاعِقَـة (साइक़:) कठिन प्रकोपलाई भन्दछन् । यो प्रकोप उनीमाथि चित्कार तथा भूकम्पको रुपमा आयो जसले अपमानका साथ उनलाई सत्यानाश गरियो ।

[4]यहाँ اذكـر लुप्त छ । अर्थात त्यो समय याद गर जब अल्लाहका विरोधीहरुलाई फरिश्ताहरु एकत्रित गर्नेछन् अर्थात् आददेखि अन्तसम्मका विरोधीहरुको जम्मा हुनेछ ।

[5] أي : يُحبَسُ أولهـم على آخرهـم لِيُلاحِقـوا अर्थात् "उनलाई रोकि-रोकि उनका आदि तथा अन्तलाई परस्पर एकत्रित गरिनेछ ।" (फतहुल क़दीर) यस शब्दको बढी व्याख्याका लागि हेर्नुस् सूर: अन्नमल आयत न. १७ भाष्य ।

حَتَّىٰٓ إِذَا مَا جَآءُوهَا شَهِدَ عَلَيۡهِمۡ سَمۡعُهُمۡ وَأَبۡصَٰرُهُمۡ وَجُلُودُهُم بِمَا كَانُواْ يَعۡمَلُونَ ٢٠

(२०) यहाँसम्मकि जब नरकका अति निकट आउनेछन्, उनीमाथि उनका कान तथा उनका आँखा एवं उनका छालाहरु उनका कर्महरुको साक्ष्य दिनेछन् ।[1]

وَقَالُواْ لِجُلُودِهِمۡ لِمَ شَهِدتُّمۡ عَلَيۡنَاۖ قَالُوٓاْ أَنطَقَنَا ٱللَّهُ ٱلَّذِيٓ أَنطَقَ كُلَّ شَيۡءٖۚ وَهُوَ خَلَقَكُمۡ أَوَّلَ مَرَّةٖ وَإِلَيۡهِ تُرۡجَعُونَ ٢١

(२१) तथा यिनी आफ्ना खाल (छाला) हरुसित भन्नेछन् कि तिमीले हाम्रा विरुद्ध साक्ष्य किन दियौ ।[2] उनीहरुले उत्तर दिनेछन् कि हामीले त्यस अल्लाहले बोल्ने शक्ति दियो जसले प्रत्येक वस्तुलाई बोल्ने शक्ति प्रदान गरेको छ, उसैले प्रथम पटक तिमीलाई पैदा गऱ्यो तथा उसैतिर तिमी सबै फर्काइनेछौ ।[3]

[1]अर्थात् जब उनी शिर्क गर्ने कुरोलाई नकार दिनेछन् त अल्लाह उनका मुखहरुमा मोहर लगाइदिनेछ तथा उनका अङ्ग गवाही दिनेछन् कि यिनी अमुक-अमुक कार्य गर्दथे । ﴿إِذَا مَا جَآءُوهَا﴾ मा مَا अधिक छ जोड दिनका लागि । मानिसभित्र पाँच ज्ञान इन्द्रियहरु छन् । उनीहरुमध्ये यहाँ दुईको वर्णन छ । तेस्रो खाल (छाला) हो जो स्पर्श तथा छुनुको साधन हो । यसप्रकार ज्ञानेन्द्रियहरुका तीन प्रकार भए । शेष दुई ज्ञानेन्द्रियहरुको चर्चा गरेन कि 'चाख्नु' कै प्रकारले स्पर्शमा सम्मिलित छ, किनकि यो चाख्नु त्यस समयसम्म सम्भव नै छैन जबसम्म त्यस वस्तुलाई जिभ्रोमा नराखियोस् । यसैप्रकार 'सुँघ्नु' त्यस समयसम्म सम्भव छैन जबसम्म त्यो वस्तु नाकको त्वचासित स्पर्श नगरोस् । यसप्रकार جلود छालाहरु) शब्दमा तीन ज्ञान इन्द्रियहरु आउँछन् । (फ़तहुल क़दीर)

[2]अर्थात् जब मुश्रिकीन र काफ़िर देख्नेछन् कि उनका शरीरका समस्त अङ्ग उनका विपरीत साक्ष्य दिइराखेका छन् त उनीहरु आश्चर्यले अथवा यातनाको रुपमा र क्रोधमा उनीसित भन्नेछन् ।

[3]केही विद्वानहरुका विचारमा وَهُوَ सित अल्लाहको कथन तात्पर्य छ । यस आधारमा यो नयाँ तथा अलग वाक्य छ, तथा केही ज्ञाताहरुका विचारमा मानवीय छालाहरुको नै । यस आधारमा यो उनैका वाक्यको पूरक कथन हो । केयामतका दिन अङ्गहरुबाट साक्ष्य दिनुको वर्णन गुज्रिसकेछ तथा सहीह हदीसहरुमा पनि यसलाई वर्णित गरिएको छ । उदाहरणार्थ जब अल्लाहको आज्ञाले मानवीय अङ्ग बोलेर भन्नेछन्, त सम्बन्धित व्यक्तिले भन्नेछ, ﴿بُعْدًا لَكُنَّ وَسُحْقًا، فَعَنْكُنَّ كُنْتُ أُنَاضِلُ﴾ "तिम्रो लागि विनाश तथा दूरी होस् । म त तिम्रो पक्षमा नै झगडिराखेका तथा सुरक्षा गरिराखेका थिएँ । (सहीह मुस्लिम किताबुज़ जुहद) यसै हदीसमा यो पनि वर्णन भयो कि व्यक्तिले भन्नेछ कि म आफ्ना

وَمَا كُنتُمْ تَسْتَتِرُونَ أَن يَشْهَدَ عَلَيْكُمْ سَمْعُكُمْ وَلَا أَبْصَارُكُمْ وَلَا جُلُودُكُمْ وَلَٰكِن ظَنَنتُمْ أَنَّ اللَّهَ لَا يَعْلَمُ كَثِيرًا مِّمَّا تَعْمَلُونَ ﴿٢٢﴾

(२२) तथा तिमी (आफ्ना कुकर्म यसकारण) लुकाएर राख्दैनथ्यौ कि तिमीमाथि तिम्रा कान तथा तिम्रा आँखा एवं तिम्रा छालाहरु साक्ष्य दिनेछन्[1] तथा तिमी यो ठान्दै गर्थ्यौ कि तिमी जे-जति पनि गरिराखेका छौ त्यसमध्ये धेरै कर्महरुबाट अल्लाह अन्जान छ ।[2]

وَذَٰلِكُمْ ظَنُّكُمُ الَّذِي ظَنَنتُم بِرَبِّكُمْ أَرْدَاكُمْ فَأَصْبَحْتُم مِّنَ الْخَاسِرِينَ ﴿٢٣﴾

(२३) तिम्रा यसै कुविचारले जो तिमीले आफ्ना प्रभुका विषयमा गरेका थियौ, तिमीलाई नाश गरिदियो[3] तथा अन्तमा तिमी हानि बेहोर्नेहरु मध्येका भइहाल्यौ ।

मनका अतिरिक्त कसैको साक्ष्य मान्ने छैन । अल्लाह तआलाले भन्नेछ कि के म तथा मेरा फरिश्ता कर्म-लेखक साक्ष्यका लागि पर्याप्त छैनन् । अनि तिनका मुखमा मोहर (छाप) लगाइदिइनेछ तथा उनका अङ्गहरुलाई बोल्नुको आदेश दिइनेछ ।

[1]यसको अभिप्राय हो कि तिमी पापको कर्म गर्दै त मानिसहरुमा लुक्ने प्रयास गर्दथ्यौ किन्तु तिमीलाई यसको कुनै भय थिएन कि तिम्रा विरूद्ध स्वयं तिम्रा अङ्ग पनि साक्ष्य दिनेछन् कि जसबाट लुक्नुको आवश्यकताको आभास गर्दथ्यो । यसको कारण उनीबाट पुनर्जीवन इन्कार तथा अविश्वास थियो ।

[2]यसकारण तिमी अल्लाहको सीमा नाघ्न तथा उहाँको अवज्ञामा निर्भीक थियौ ।

[3]अर्थात् तिम्रो यस दूरास्था एवं अनृत भ्रमले कि अल्लाहलाई हाम्रा धेरै कर्महरुको ज्ञान हुँदैन, तिमीलाई विनाशमा पारिदियो, यसकारण कि यसका कारण तिमी प्रत्येक प्रकारका पाप गर्नुमा बहादुर तथा निर्भीक भएका थियौ । यसका अवतरणका कारणका सम्बन्धमा एउटा हदीस छ । माननीय अब्दुल्लाह बिन मसऊद भन्नुहुन्छ कि “खानये काबा” का नजीक दुई कुरैशी तथा एउटा सक़फी अथवा एक कुरैशी एकत्र भए, ठूला शरीर एवं कम बुद्धिवाला । यिनीहरुमध्ये एउटाले भन्यो, “के तिमी ठान्दछौं, हाम्रा कुरा अल्लाह सुन्दछ ?” दोस्रोले भन्यो हाम्रा खुल्ला कुराहरु सुन्दछ तथा गुप्त कुराहरु सुन्दैनन् । एउटा अन्यले भन्यो, “यदि त्यो हाम्रा खुल्ला कुरा सुन्दछ भने हाम्रो गुप्त कुरा पनि अवश्य सुन्दछ ।” जसमाथि अल्लाहले आयत ﴿وَمَا كُنتُمْ تَسْتَتِرُونَ﴾ अवतरित गर्‍यो (सहीह बुखारी, व्याख्या सूरः हा.मीम.असस्जदा)

فَإِن يَصْبِرُوا فَالنَّارُ مَثْوًى لَّهُمْ ۖ وَإِن يَسْتَعْتِبُوا فَمَا هُم مِّنَ الْمُعْتَبِينَ ﴿٢٤﴾

(२४) अब यदि यिनी धैर्य राखेपनि यिनको ठेगाना नरक् नै छ तथा यदि यिनीहरु क्षमा-याचना पनि गर्न चाहन्छन् तैपनि क्षमा गरिने छैन ।[1]

وَقَيَّضْنَا لَهُمْ قُرَنَاءَ فَزَيَّنُوا لَهُم مَّا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ وَحَقَّ عَلَيْهِمُ الْقَوْلُ فِي أُمَمٍ قَدْ خَلَتْ مِن قَبْلِهِم مِّنَ الْجِنِّ وَالْإِنسِ ۖ إِنَّهُمْ كَانُوا خَاسِرِينَ ﴿٢٥﴾

(२५) तथा हामीले उनका केही सहभागी निर्धारित गरेका थियौं जसले उनका अघिल्ला-पछिल्ला कर्महरुलाई आकर्षक बनाएर राखेका थिए ।[2] तथा उनका पक्षमा पनि अल्लाहको वचन ती सम्प्रदायहरुका साथ पूर्ण भयो जो उनीभन्दा पूर्व जिन्न तथा मनुष्यहरुबाट गुज्रिसकेका छन् । निःसन्देह उनी हानि बेहोर्नेहरु सिद्ध भए ।

وَقَالَ الَّذِينَ كَفَرُوا لَا تَسْمَعُوا لِهَٰذَا الْقُرْآنِ وَالْغَوْا فِيهِ

(२६) तथा काफ़िरहरुले भने कि यस कुरआनलाई सुन्दै नसुन[3] (उनलाई पाठ गर्नका समय) तथा वाहियात कुरा गर,[4] के विचित्र छ कि तिमी

[1]एउटा अन्य अर्थ यसको यो गरिएको छ कि उनीहरु रिझाउन चाहनेछन् عُتْبَى (प्रसन्नताको माँग गर्नेछन्) ताकि तिनी स्वर्गमा गइहालून् त यो कुरा उनीहरुलाई कहिल्यै सुलभ हुनेछैन (ऐसरुत्तफासीर तथा फ़तहुल क़दीर) केही ज्ञाताहरुले यसको अर्थ यो वर्णन गरेका छन् कि उनी संसारमा पुनः पठाइनुको कामना गर्नेछन् जो अंगीकार गरिने छैन । (इब्ने ज़रीर तबरी) अभिप्राय यो हो कि उनको नित्यको आवाज नरक् हुनेछ । यसमाथि धैर्य गरून् (तैपनि दया गरिने छैन जस्तो कि संसारमा कहिल्यै धैर्यवानहरुमाथि दया आउँछ) अथवा कुनै पनि प्रकार त्यहाँबाट उम्कने प्रयास गरुन् । उनलाई सफलता प्राप्त हुनेछैन ।

[2]यिनीबाट तात्पर्य ती शैतान, मनुष्य एवं जिन्न हुन् जो असत्यमाथि दुराग्रह गर्नेहरुसँग लाग्दछन्, जो उनीहरुलाई कुफ्र तथा पापहरुलाई शोभनीय बनाएर देखाउँछन् । त उनी यस कुपथको दलदलमा अल्झिरहन्छन् यहाँसम्मकि उनको मृत्यु आइपुग्छ तथा उनी सदाको क्षतिको पात्र बन्दछन् ।

[3]यो उनीहरुले परस्पर भने केही विद्वानहरुले لا تسمعوا को अर्थ गरेका छन् कि त्यसको अनुसरण नगर ।

[4]अर्थात् होहल्ला गर, थपडी, सीटिहरु बजाउ, चिच्याएर कुरा गर ताकि उपस्थित मानिसहरुका कानमा कुरआनको आवाज नजाओस् । तथा उनका हृदय कुरआनको शैली तथा गुणहरुबाट प्रभावित नहोऊन् ।

لَعَلَّكُمْ تَغْلِبُونَ ﴿٢٦﴾

प्रभावशाली भइहाल ।[1]

فَلَنُذِيقَنَّ الَّذِينَ كَفَرُوا عَذَابًا شَدِيدًا وَلَنَجْزِيَنَّهُمْ أَسْوَأَ الَّذِي كَانُوا يَعْمَلُونَ ﴿٢٧﴾

(२७) त निःसन्देह हामी ती काफिरहरुलाई कठोर यातनाको स्वाद चखाउनेछौं तथा उनलाई उनका अति नराम्रा कर्महरुको फल (अवश्य) दिनेछौं ।[2]

ذَٰلِكَ جَزَاءُ أَعْدَاءِ اللَّهِ النَّارُ ۖ لَهُمْ فِيهَا دَارُ الْخُلْدِ ۖ جَزَاءً بِمَا كَانُوا بِآيَاتِنَا يَجْحَدُونَ ﴿٢٨﴾

(२८) अल्लाहका शत्रुहरुको फल (दण्ड) त्यही नरकको अग्नि हो, जसमा उनको स्थाई निवास छ, (यो) प्रतिफल हो हाम्रा आयतहरुलाई अस्वीकार गर्नुको ।[3]

وَقَالَ الَّذِينَ كَفَرُوا رَبَّنَا أَرِنَا الَّذَيْنِ أَضَلَّانَا مِنَ الْجِنِّ وَالْإِنْسِ نَجْعَلْهُمَا تَحْتَ أَقْدَامِنَا لِيَكُونَا مِنَ الْأَسْفَلِينَ ﴿٢٩﴾

(२९) तथा काफिरहरु भन्नेछन् कि हे हाम्रा प्रभु ! हामी जिन्न तथा मनुष्यहरुका ती (दुबै पक्षहरु) लाई देखाउ, जसले हामीलाई विचलित पारे[4] (ताकि) हामी उनलाई आफ्ना खुट्टामुनि पारिदिऔं

[1]अर्थात् सम्भव छ कि यसप्रकार होहल्ला मच्चाउनका कारणले मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) कुर्आनको पाठ नै नगरुन् जसलाई सुनेर मानिस प्रभावित हुन्छन् ।

[2]अर्थात् उनका केही सत्कर्महरुको कुनै मुल्य हुनेछैन, जस्तै अतिथि सत्कार, सम्बन्धिहरुका साथ सद्भाव इत्यादि किनकि उनीहरु ईमानका धनबाट बञ्चित रहे । हो, कुकर्महरुको प्रतिकार उनीहरुलाई अवश्य प्राप्त हुनेछ जसमा पवित्र कुर्आनबाट रोक्नुको अपराध पनि छ ।

[3]आयतहरुसित तात्पर्य जस्तो कि पहिला पनि भनिएको छ कि उनी खुला प्रमाण तथा तर्क हुन् जो अल्लाह तआला अम्बिया (ईशदूतहरु) उतारदछ, अथवा ती चमत्कार हुन् जो उनलाई प्रदान गरिन्छन्, अथवा उत्पत्तिका ती प्रमाण हुन् जो विश्व तथा प्राणीहरुमा फैलिएका छन् । काफिर यी सबैको इन्कार गर्दछन् जसका कारण उनी ईमानबाट बञ्चित रहन्छन् ।

[4]यसको भावार्थ स्पष्ट छ, कि पथभ्रष्ट गर्ने शैतान नै हुँदैनन्, मानिसहरुको एक ठूलो संख्या पनि शैतानका प्रभावका अधीन मानिसहरुलाई बहकाउनमा तत्पर रहन्छन् । तैपनि केही विद्वानहरुले जिन्नसित इब्लीस तथा मानिसबाट काबील तात्पर्य लिएका छन्, जसले मानिसहरुमा सबभन्दा पहिला आफ्ना भाइ हाबीललाई वध गरेर अत्याचार तथा महापाप गर्‍यो तथा हदीसानुसार केयामतसम्म हुने सबै अवैध संहारहरुका पापको भाग त्यसले पाइराख्नेछ । हाम्रा विचारले पहिलो भावार्थ अधिक सही छ ।

ताकि उनी अत्यन्त तल (कठोर यातनामा) हुन जाऊन् ।[1]

إِنَّ الَّذِينَ قَالُوا رَبُّنَا اللَّهُ ثُمَّ اسْتَقَامُوا تَتَنَزَّلُ عَلَيْهِمُ الْمَلَائِكَةُ أَلَّا تَخَافُوا وَلَا تَحْزَنُوا وَأَبْشِرُوا بِالْجَنَّةِ الَّتِي كُنتُمْ تُوعَدُونَ ﴿٣٠﴾

(३०) वास्तवमा जसले भने कि हाम्रो प्रभु अल्लाह हो[2] अनि त्यसैमा दृढ रहे,[3] उनका छेउ फरिश्ताहरु (यो भन्दै) आउँछन्[4] कि तिमी केही पनि भयभीत तथा दुखी नहोउ[5] (बरु) त्यस स्वर्गको शुभसूचना सुनिहाल

[1]अर्थात् आफ्ना खुट्टाले उनीहरुलाई कुल्चौं तथा यसप्रकार हामी उनीहरुलाई पनि अपमानित तथा निरादर गरौं । नरकवासीहरुलाई आफ्ना नेताहरुमाथि जो क्रोध हुनेछ, त्यसको सन्तुष्टिका लागि उनी भन्नेछन् । अन्यथा दुबै नै अपराधी हुन् तथा दुबै नै एक जस्तो नरकको दण्ड भोग्नेछन् । जस्तो अर्को स्थानमा अल्लाहले भन्नुभयो ﴿لِكُلٍّ ضِعْفٌ وَلَٰكِن لَّا تَعْلَمُونَ﴾ (अल-आराफ-३८) नरकवासीहरुको चर्चाका पश्चात अल्लाह तआला स्वर्गवासीहरुको चर्चा गरिराखेको छ, जस्तो कि साधारणत: कुरआनको शैली हो ताकि चेतावनीका साथ प्रोत्साहन तथा प्रोत्साहनका साथ चेतावनीको पनि प्रबन्ध रहोस्, मानौं तर्साउनुका पश्चात शुभसूचना ।

[2]अर्थात् एक अल्लाह बिना साझीको, पालनकर्ता पनि त्यही तथा पूज्य पनि त्यही । यो होइन कि पालनकर्ता हुने कुरो त स्वीकार परन्तु उपास्य (अरुलाई पनि साझी) बनाइँदैछ ।

[3]अर्थात् कठिनभन्दा कठिन स्थितिमा पनि ईमानमा स्थिर रहोस्, त्यसबाट विमुख नहोस् । केही ज्ञाताहरुले स्थिरताको अर्थ विशुद्धता लिएका छन्, अर्थात् मात्र एक अल्लाहकै इबादत तथा आज्ञापालन गरे । जुनप्रकार हदीसमा चर्चित छ कि एक व्यक्तिले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित भन्यो । "मलाई यस्तो कुरा बताइदिनुस् कि तपाईंका पश्चात मलाई कसैसित प्रश्न गर्नुको आवश्यकता नहोस् ।" उहाँले भन्नुभयो, «قُلْ آمَنْتُ بِاللَّهِ ثُمَّ اسْتَقِمْ»

"भन, मैले अल्लाहमाथि ईमान स्वीकार गरें अनि यसमाथि अडिग रह ।" (सहीह मुस्लिम, किताबुल ईमान, बाबु जामिअे औसाफिल इस्लाम)

[4]अर्थात् मृत्युका समय । केही ज्ञाताहरु भन्दछन् कि फरिश्ताहरु यो शुभ-सूचना तीन स्थानहरुमा दिइन्छन् मृत्युका समय, चिहानमा तथा कब्रबाट पुन: उठ्नुका समय ।

[5]अर्थात् परलोकमा आगामी स्थितिहरुको चिन्ता तथा संसारमा धन-सन्तानका त्यागको शोक नगर ।

जसको तिमीलाई वचन दिएको छ ।[1]

نَحْنُ أَوْلِيَاؤُكُمْ فِي الْحَيَاةِ الدُّنْيَا وَفِي الْآخِرَةِ ۖ وَلَكُمْ فِيهَا مَا تَشْتَهِي أَنفُسُكُمْ وَلَكُمْ فِيهَا مَا تَدَّعُونَ ﴿٣١﴾

(३१) तिम्रा सांसारिक जीवनमा पनि हामी तिम्रा शुभचिन्तक थियौं तथा आख़िरतमा पनि रहनेछौं,[2] जुन वस्तुलाई तिम्रो मन चाहन्छ तथा जे-जति माँग्छौ सबै तिम्रा लागि [स्वर्गमा विद्यमान (उपस्थित)] छ ।

نُزُلًا مِّنْ غَفُورٍ رَّحِيمٍ ﴿٣٢﴾

(३२) अत्यन्त क्षमा गर्नेवाला अत्यन्त कृपालुतिरबाट ती सबैथोक अतिथि सत्कारका रुपमा छन् ।

وَمَنْ أَحْسَنُ قَوْلًا مِّمَّن دَعَا إِلَى اللَّهِ وَعَمِلَ صَالِحًا وَقَالَ إِنَّنِي مِنَ الْمُسْلِمِينَ ﴿٣٣﴾

(३३) तथा त्यसभन्दा अधिक राम्रो कुरावाला को छ जो अल्लाहतिर बोलाउँछ, पुण्यका कार्य गर्दछ तथा भन्दछ कि म निश्चितरुपले मुसलमानहरुमध्ये हूँ ।[3]

وَلَا تَسْتَوِي الْحَسَنَةُ وَلَا السَّيِّئَةُ ۚ ادْفَعْ بِالَّتِي هِيَ أَحْسَنُ فَإِذَا الَّذِي بَيْنَكَ وَبَيْنَهُ عَدَاوَةٌ كَأَنَّهُ وَلِيٌّ حَمِيمٌ ﴿٣٤﴾

(३४) पुण्य तथा पाप समान हुँदैन,[4] नराम्रोलाई भलाईबाट टाढा गर, अनि त्यही जसको र तिम्रो बीच शत्रुता छ यस्तो हुनजानेछ जस्तो हार्दिक मित्र ।[5]



[1]अर्थात् संसारमा जसको वचन तिमीलाई दिइएको थियो ।

[2]यो अधिक शुभ-सूचना हो, यो अल्लाह तआलाको कथन हो । केही ज्ञाताहरुका विचारमा यो फरिश्ताहरको कथन हो । दुबै रुपहरुमा यो ईमान्दारका लागि महान शुभ-सूचना हो ।

[3]अर्थात् मानिसहरुलाई अल्लाहतिर बोलाउनुका साथ-साथै स्वयं पनि सन्मार्ग प्राप्त धर्मको अनुपालक तथा अल्लाहको आज्ञाकारी हो ।

[4]बरु उनमा महान अन्तर छ ।

[5]यो एउटा ठूलै महत्वपूर्ण नैतिक निर्देश हो कि नराम्रोलाई राम्राका साथ हटाउ । अर्थात अपकारको बदला उपकारका साथ, अत्याचारको क्षमाबाट क्रोधको धैर्यले तथा अप्रिय कुराहरुको सहनशीलताले दिइयोस् । यसको प्रभाव यो हुनेछ कि तिम्रो शत्रु मित्र बनिहाल्नेछ, दूरस्थ समीपस्थ तथा रगतको पिपासु,

وَمَا يُلَقّٰهَآ اِلَّا الَّذِيْنَ صَبَرُوْا ۚ وَمَا يُلَقّٰهَآ اِلَّا ذُوْحَظٍّ عَظِيْمٍ ﴿٣٥﴾

(३५) तथा यो कुरा उनीहरुकै सौभाग्यमा हुन्छ, जो धैर्य राख्दछन्,[१] तथा त्यसलाई अति शौभाग्यशालीका अतिरिक्त कसैले प्राप्त गर्न सक्दैन ।[२]

وَاِمَّا يَنْزَغَنَّكَ مِنَ الشَّيْطٰنِ نَزْغٌ فَاسْتَعِذْ بِاللّٰهِ ۭ اِنَّهٗ هُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٣٦﴾

(३६) तथा यदि शैतानतिरबाट कुनै शंका उत्पन्न हुन्छ त अल्लाहको शरण चाह ।[३] नि:सन्देह त्यो अति सुन्नेवाला तथा जान्नेवाला छ ।[४]

وَمِنْ اٰيٰتِهِ الَّيْلُ وَالنَّهَارُ وَالشَّمْسُ وَالْقَمَرُ ۭ لَا تَسْجُدُوْا

(३७) तथा दिन-रात एवं सूर्य तथा चन्द्रमा पनि उसैका निशानीहरु मध्येका हुन्,[५] तिमी सूर्य

तिम्रो मोहित तथा ज्यान दिनेवाला हुनेछ ।

[१]अर्थात् नराम्रोलाई राम्रोबाट हटाउनुको गुण यद्यपि अति लाभप्रद तथा बडो सफल छ, किन्तु यसका अनुसार कर्म तिनै गर्नसक्ने छन् जो धैर्यवान हुनेछन्, क्रोधलाई शान्त पार्ने तथा अप्रिय कुराहरु सहन गर्नेहरु ।

[२] حَظٍّ عَظِيْمٍ (बडो सौभाग्य) सित अभिप्राय स्वर्ग हो, अर्थात् उपरोक्त गुण उनलाई प्राप्त हुन्छन् जो बडो भाग्यशाली हुन्छन् । अर्थात् स्वर्गीय, जसको स्वर्गमा जाने कुरो लेखिदिएको छ ।

[३]अर्थात् शैतान धर्म-विधानका कर्मबाट फर्काउन चाहन्छ अथवा उत्तम ढङ्गले नराम्रोलाई हटाउनमा बाधा पुऱ्याउँछ भने त्यसको कुकर्मबाट बच्नको लागि अल्लाहको शरण माँग ।

[४]तथा जो यस्तो हुन्छ अर्थात् प्रत्येकको सुन्ने तथा प्रत्येक कुराको जान्नेवाला, त्यसैले शरण दिनसक्छ । यो पूर्वको कारण बताइएको छ । यसका पश्चात अब फेरि केही निशानीहरुको चर्चा गरिंदैछ जो अल्लाहका पूर्ण सामर्थ्य, त्यसको एकता (तौहीद) तथा त्यसको आधिकारिक शक्तिलाई व्यक्त गरिराखेको छ ।

[५]अर्थात् रातलाई अँध्यारो बनाउनु ताकि मानिस त्यसमा विश्राम गर्न सकून् । दिनलाई प्रकाशित बनाउनु ताकि जीविका उपार्जनमा अप्ठ्यारो नहोस् । अनि एकको पश्चात अर्कोको आवत-जावत तथा कहिले राति लामो तथा दिन सानो हुनु, कहिले यसका विपरीत हुनु । यसैप्रकार चन्द्रमा आ-आफ्नो समयसित निस्कनु एवं अस्ताउनु तथा आफ्ना अक्षमा माथि आफ्ना गन्तव्य तय गर्नु यस कुराको प्रमाण हो कि निश्चय उनको रचयिता तथा स्वामी छ । तथा त्यो एक एवं केवल एक छ तथा विश्वमा उसैको आधिकार एवं आदेश चल्छ ।

لِلشَّمْسِ وَلَا لِلْقَمَرِ وَاسْجُدُوا لِلَّهِ الَّذِي خَلَقَهُنَّ إِن كُنتُمْ إِيَّاهُ تَعْبُدُونَ ﴿٣٧﴾

तथा चन्द्रमाका समक्ष शिर न निहुराउ[1] बरु शिर त्यस अल्लाहका समक्ष निहुराउ जसले ती सबैलाई सृष्टि गरेको छ,[2] यदि तिमीलाई उसैको उपासना गर्दछौ ।

فَإِنِ اسْتَكْبَرُوا فَالَّذِينَ عِندَ رَبِّكَ يُسَبِّحُونَ لَهُ بِاللَّيْلِ وَالنَّهَارِ وَهُمْ لَا يَسْأَمُونَ ﴿٣٨﴾ السجدة

(३८) तैपनि यदि उनीहरु अहंकार गर्छन् भने ती (फरिश्ताहरु) जो तपाईंका प्रभुका निकट छन्, उनी त रात-दिन उसको महिमाको वर्णन गर्दछन् तथा (कुनै समय पनि) थाक्दैनन् ।

وَمِنْ آيَاتِهِ أَنَّكَ تَرَى الْأَرْضَ خَاشِعَةً فَإِذَا أَنزَلْنَا عَلَيْهَا الْمَاءَ اهْتَزَّتْ وَرَبَتْ إِنَّ الَّذِي أَحْيَاهَا لَمُحْيِي الْمَوْتَى إِنَّهُ عَلَى كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٣٩﴾

(३९) तथा त्यस (अल्लाह) का निशानीहरुमध्ये (यो पनि) हो कि तिमी धर्तीलाई थिचिएको (शुष्क) देख्दछौ,[3] अनि जब हामी त्यसमाथि वर्षा गर्दछौं त त्यो ताजा भएर माथि फुलेर आउँछ ।[4] जसले त्यसलाई जीवित गरिदियो, त्यही निश्चित रुपले मृतलाई पनि जीवित गर्ने

चल्छ । यदि व्यवस्थापक तथा प्रवन्धक एकभन्दा अधिक भएको भए त विश्वको यो सञ्चालन यस्तो सुदृढ तथा राम्रो ढङ्गले चल्न सक्दैनथ्यो ।

[1]यसकारण कि यो पनि तिमीजस्तै अल्लाहको सृष्टि हुन्, ईश्वरीय गुणहरुले युक्त अथवा त्यसमा साझी छैनन् ।

[2] خَلَقَهُنَّ मा सर्वनाम बहुवचन स्त्रीलिङ्ग यसकारण आएको छ कि यो या त خَلَقَ هذه الأربعة المذكورة का भावार्थमा छ, किनकि नपुसंकका बहुवचनका नियम स्त्रीलिङ्ग वहुवचनकै छ, अथवा त्यो केवल شمس و قمر तिर फर्किरहेको छ । केही व्याकरण विशेपज्ञहरुका निकट दुई वचन पनि बहुवचन हो अथवा फेरि अभिप्राय अल-आयात الآيات जो स्त्रीलिङ्ग बहुवचन हो । (फ़तहुल क़दीर)

[3] خاشعة को अभिप्राय शुष्क तथा अकालग्रस्त अर्थात् मृत छ ।

[4]अर्थात् विभिन्न प्रकारका स्वादिष्ट फल तथा अन्न उब्जाउन्छ ।

वाला छ ।[१] निःसन्देह त्यो प्रत्येक वस्तुमाथि सामर्थ्यवान छ ।

إِنَّ الَّذِينَ يُلْحِدُونَ فِيٓ ءَايَٰتِنَا لَا يَخْفَوْنَ عَلَيْنَآ ۗ أَفَمَن يُلْقَىٰ فِى النَّارِ خَيْرٌ أَم مَّن يَأْتِيٓ ءَامِنًا يَوْمَ الْقِيَٰمَةِ ۚ اعْمَلُوا۟ مَا شِئْتُمْ ۖ إِنَّهُۥ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٤٠﴾

(४०) निःसन्देह जो मानिस हाम्रा आयतहरुमा बाङ्गोपना गर्छन्[२] ती (केही) हामीबाट लुकेका छैनन्[३] (भन त) जो अग्निमा हालिनेछ, त्यो राम्रो छ अथवा त्यो जो शान्तिपूर्वक कयामतका दिन आउँछ ?[४] तिमी जे चाहन्छौ गर्दैजाउ; त्यो तिमीबाट गरिएका कुरा देखिराखेको छ ।[५]

إِنَّ الَّذِينَ كَفَرُوا۟ بِالذِّكْرِ لَمَّا جَآءَهُمْ ۖ وَإِنَّهُۥ لَكِتَٰبٌ عَزِيزٌ ﴿٤١﴾

(४१) जसले आफ्ना निकट पवित्र कुरआन पुगिजानुका उपरान्त त्यसबाट कुफ्र गरे (ती पनि हामीबाट लुकेका छन्),[६] यो अत्यन्त

[१]मृत्यु भूमिलाई वर्षाद्वारा यसप्रकार जीवन प्रदान गरिदिनु तथा त्यसबाट उपजका योग्य बनाउनु यस कुराको प्रमाण हो कि त्यसले मुद्दाहरुलाई पनि निश्चय जीवित गर्नेछ ।

[२]अर्थात् त्यसलाई मान्दैनन् वरु त्यसबाट भुठ्लाउँछन् । आदरणीय इब्ने अब्बासले الحاد (इल्हाद) को अर्थ लगाएका छन् وضع الكلام على غير مواضعه यस आधारमा यसमा त्यो असत्य समूह पनि आउँछन् जो आफ्ना असत्य विश्वास एवं सिद्धान्तको सिद्धिका लागि अल्लाहको आयतहरुका अर्थमा परिवर्तन गर्दछन् तथा धोखाबाट काम लिन्छन् ।

[३]यो नास्तिकहरुका लागि कडा चेतावनी हो चाहे उनी कुनै प्रकारका होऊन् ।

[४]अर्थात् के यी दुवै बराबर हुनसक्छन् ? होइन, वस्तुतः होइन । यसका अतिरिक्त यसबाट संकेत गरियो कि (मूलहिदीन) नास्तिक आगोमा हाल्नेछन् तथा ईमानवाला कयामत (प्रलय) का दिन निर्भय रहनेछन् ।

[५]यो आदेश सूचक शब्द हो, किन्तु यहाँ त्यसबाट अभिप्राय धम्की तथा चेतावनी दिनु हो । कुफ्र एवं शिर्क तथा पापका लागि अनुमति तथा औचित्य छैन ।

[६]कोष्ठका शब्द إِنَّ (इन्न) का लुप्त विधेय अनवाद हो । केही विद्वानहरु भन्छन् कि केही अरु शब्द लुप्त छन्, उदाहरणका लागि يُجازون بكفرهم (उनीहरुलाई उनका कुफ्रको दण्ड दिइनेछ) अथवा يُعَذَّبُونَ (तिनी नाश हुनेवाला हुन्) अथवा يُعَذَّبُونَ (उनी यातना दिइनेछन्) ।

महान (सम्मानित) किताब हो ।[1]

(४२) जसका पासमा असत्य आउनै सक्दैन न त्यसका अगाडीबाट न त्यसका पछाडीबाट, यो हो अवतरित गरिएको (अल्लाह) हिक्मत एवं गुणहरु भएको तर्फबाट ।[2]

لَّا يَأْتِيهِ الْبَاطِلُ مِن بَيْنِ يَدَيْهِ وَلَا مِنْ خَلْفِهِ ۖ تَنزِيلٌ مِّنْ حَكِيمٍ حَمِيدٍ ﴿٤٢﴾

(४३) तपाईंसित त्यही भनिन्छ जो तपाईंभन्दा पूर्वका रसूलहरुसित पनि भनिएको छ ।[3] निःसन्देह तपाईंको प्रभु क्षमा गर्नेवाला तथा दुखदायी

مَّا يُقَالُ لَكَ إِلَّا مَا قَدْ قِيلَ لِلرُّسُلِ مِن قَبْلِكَ ۚ إِنَّ رَبَّكَ لَذُو مَغْفِرَةٍ وَذُو عِقَابٍ أَلِيمٍ ﴿٤٣﴾

[1]अर्थात् यो किताब जसबाट मुख फर्काइँदैछ, अवरोध तथा आक्षेप लगाउनेहरुको निन्दा भन्दा अति उच्च तथा सबै दोषहरुबाट पवित्र छ ।

[2]अर्थात् त्यो हरप्रकारले सुरक्षित छ । अगाडीबाटको अभिप्राय हो कमी तथा पछाडीबाटको अभिप्राय हो अधिकता, अर्थात् असत्य अगाडीबाट आएर त्यसमा कमी तथा पछाडीबाट आएर न अधिक गर्नसक्दछ तथा न कुनै परिवर्तन, तथा न फेरबदल गर्नमा सफल हुनसक्छ । किनकि त्यो त्यसको तर्फबाट अवतरित छ, जो आफ्नो कर्म तथा कथनमा तत्वदर्शी छ तथा प्रशंसित छ । अर्थात् त्यो जुन कुराहरुको आदेश तथा निषेध गर्दछ परिणाम एवं अन्तमा प्रशंसनीय हुन्छन् अर्थात् राम्रा तथा लाभप्रद छन् । (इब्ने कसीर)

[3]अर्थात् विगत समुदायहरुले आफ्ना पैगम्बरहरुलाई झुठ्लाउनमा जे-जति भने कि यो जादूगर हो, उन्मादग्रस्त छन्, झूठा छन्, आदि-आदि, त्यही मक्काका काफिरहरुले पनि तपाईंलाई भनेका छन् । यो सम्झ कि जस्तै उहाँ सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना दिइराखिएको छ कि तपाईंलाई झुठ्लाउनु तथा तपाईंलाई जादू, झूठ, उन्मादसित सम्बन्धित गर्नु नयाँ कुरा होइन । प्रत्येक पैगम्बरसँग यही हुँदै आएको छ जस्तै अर्को स्थानमा भन्यो :

﴿ مَا أَتَى الَّذِينَ مِن قَبْلِهِم مِّن رَّسُولٍ إِلَّا قَالُوا سَاحِرٌ أَوْ مَجْنُونٌ ۞ أَتَوَاصَوْا بِهِ ۚ بَلْ هُمْ قَوْمٌ طَاغُونَ ﴾

(अज़्ज़ारियात-५२, ५३)

दोस्रो अभिप्राय यसको यो हो कि यी तिनै कुरा हुन् जो तपाईंभन्दा पहिला रसूलहरुसित भनिएका थिए । यसकारण कि सबै धर्मविधान यी कुराहरुमा एकमत रहेका छन्, बरु तौहीद (एकेश्वरवाद) एवं शुद्धता सबैको सर्वप्रथम आमन्त्रण रहेको छ । (फतहुल कदीर)

[4]अर्थात् ती ईमान तथा तौहीदवालाहरुका लागि जो मोक्षका पात्र छन् ।

यातना दिनेवाला छ ।[1]

وَلَوْ جَعَلْنَٰهُ قُرْءَانًا أَعْجَمِيًّا لَّقَالُوا۟ لَوْلَا فُصِّلَتْ ءَايَٰتُهُۥٓ ۖ ءَا۬عْجَمِىٌّ وَعَرَبِىٌّ ۗ قُلْ هُوَ لِلَّذِينَ ءَامَنُوا۟ هُدًى وَشِفَآءٌ ۖ وَٱلَّذِينَ لَا يُؤْمِنُونَ فِىٓ ءَاذَانِهِمْ وَقْرٌ وَهُوَ عَلَيْهِمْ عَمًى ۚ أُو۟لَٰٓئِكَ يُنَادَوْنَ مِن مَّكَانٍۭ بَعِيدٍ ﴿٤٤﴾

(४४) तथा यदि हामीले त्यसलाई अरबी बाहेकको भाषामा कुर्आन बनाएको भए[2] त भन्थे कि यसका आयतहरु स्पष्टरुपले वर्णन किन गरिएनन् ?[3] यो के कुरो कि किताब गैंरअरबी तथा तपाईं अरबी रसूल ?[4] (तपाईं) भनिदिनुस् कि यो ईमान भएकाहरुका लागि मार्गदर्शन एवं स्वास्थ्यकर छ, तथा जो ईमान स्वीकार गर्दैनन् त उनका कानहरुमा (बहिरोपना) बोझ छ तथा यो उनीमाथि अन्धापन हो, यिनी ती मानिसहरु हुन् जो कुनै टाढा स्थानबाट पुकारिँदै छन् ।[5]

وَلَقَدْ ءَاتَيْنَا مُوسَى ٱلْكِتَٰبَ فَٱخْتُلِفَ فِيهِ ۗ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِن رَّبِّكَ لَقُضِىَ بَيْنَهُمْ ۚ وَإِنَّهُمْ

(४५) तथा निःसन्देह हामीले मूसा (अलैहिस्सलाम) लाई किताब प्रदान गरेका थियौं त त्यसमा पनि मतभेद गरियो तथा यदि (त्यो) कुरा नभएको भए जो तपाईंका प्रभुका तर्फबाट पूर्व नै निर्धारित

---

[1]उनका लागि जो काफ़िर तथा अल्लाहका पैग़म्बरहरुका शत्रु छन् । यो आयत पनि सूरतुल हिज्र-४९)﴿ نَبِّئْ عِبَادِىٓ أَنِّىٓ أَنَا ٱلْغَفُورُ ٱلرَّحِيمُ ۞ وَأَنَّ عَذَابِى هُوَ ٱلْعَذَابُ ٱلْأَلِيمُ ﴾ (सूरतुल हिज्र-४९) का समान छन् ।

[2]अर्थात् अरबीको साटो कुनै अन्य भाषामा कुर्आन अवतरित गर्दथ्यौं ।

[3]अर्थात् हाम्रो भाषामा किन भनिएन जसलाई हामी बुझ्दथ्यौं किनकि हामी त अरबी हौं गैरअरबी (विदेशी) भाषा बुझ्दैनौं ।

[4]यो पनि काफ़िरहरुकै कथन हो कि उनी आश्चर्य गर्दथे कि रसूल त अरबी छ तथा कुर्आन त्यसमाथि गैरअरबी भाषामा अवतरित भएको छ । अभिप्राय यो हो कि कुर्आनलाई अरबी भाषामा अवतरित गरेर त्यसका सर्वप्रथम सम्बोधित अरबहरुका लागि कुनै तर्क शेष रहन दिएको छैन । यदि यो अरबीका अतिरिक्त अन्य भाषामा भएको भए त उनी बहानाहरु गर्नसक्दथे ।

[5]अर्थात् जुनप्रकार टाढाको व्यक्ति दूरीका कारण पुकार्नेवालाको आवाज सुन्नबाट रहन्छ । यसैप्रकार यिनीहरुको बुद्धि तथा बोधमा कुर्आन आउँदैन ।

لَفِي شَكٍّ مِّنْهُ مُرِيبٍ ۝٤٥

भइसकेको छ[1] त उनका मध्ये (अघिनै) निर्णय भइसकेको हुन्थ्यो[2] यिनीहरु त यसका विषयमा घोर ब्याकूल गरिदिने शंकामा छन् ।[3]

مَّنْ عَمِلَ صَالِحًا فَلِنَفْسِهِۦ ۖ وَمَنْ أَسَآءَ فَعَلَيْهَا ۗ وَمَا رَبُّكَ بِظَلَّٰمٍ لِّلْعَبِيدِ ۝٤٦

(४६) जुन व्यक्तिले पुण्यको कार्य गर्नेछ, त्यो आफ्ना लाभका लागि तथा जो नराम्रो काम गर्नेछ त्यसको भार पनि उसैमाथि छ तथा तपाईंको प्रभु भक्तहरुमाथि अत्याचार गर्नेवाला छैन ।[4]

[1]कि उनलाई दण्ड दिनुभन्दा पहिला अवसर दिइनेछ, ﴿وَلَٰكِن يُؤَخِّرُهُمْ إِلَىٰٓ أَجَلٍ مُّسَمًّى﴾ (सूरः फ़ातिर-४५)

[2]अर्थात् उनलाई तत्क्षण दण्ड दिएर नाश गरिदिन्थ्यो ।

[3]अर्थात् उनको इन्कार बुद्धि तथा ज्ञानका कारण होइन बरु केवल शंकाको कारण हो, जो उनलाई व्याकूल गरेको राख्दछ ।

[4]यसकारण कि त्यो दण्ड मात्र उसैलाई दिइन्छ जो पापी हुन्छ न कि जसलाई चाहन्छ अकारण नै यातनामा ग्रस्त गरिदिन्छ ।

إِلَيۡهِ يُرَدُّ عِلۡمُ ٱلسَّاعَةِۚ وَمَا تَخۡرُجُ مِن ثَمَرَٰتٍ مِّنۡ أَكۡمَامِهَا وَمَا تَحۡمِلُ مِنۡ أُنثَىٰ وَلَا تَضَعُ إِلَّا بِعِلۡمِهِۦۚ وَيَوۡمَ يُنَادِيهِمۡ أَيۡنَ شُرَكَآءِي قَالُوٓاْ ءَاذَنَّٰكَ مَا مِنَّا مِن شَهِيدٖ ٤٧

(४७) केयामतको ज्ञान अल्लाहतिरै फर्काइन्छ,[१] तथा जुन-जुन फल आफ्ना गाभाहरु (निस्कने ठाउँ) बाट निस्कन्छन् तथा जो पोथी गर्भवती हुन्छ एवं जो शिशु त्यसले जन्म दिन्छ, सबैको ज्ञान यसैलाई छ ।[२] तथा जुन दिन अल्लाह (तआ़ला) ती (मूर्तिपूजकहरु) लाई बोलाएर सोध्नेछ कि मेरा साझीदार कहाँ छन्; उनीहरुले उत्तर दिनेछन् कि हामीले त तिमीसित भनिदियौं कि हामीमध्ये कोही त्यसको साक्षी छैन ।[३]

وَضَلَّ عَنۡهُم مَّا كَانُواْ يَدۡعُونَ مِن قَبۡلُۖ وَظَنُّواْ مَا لَهُم مِّن مَّحِيصٖ ٤٨

(४८) तथा यिनी (जस) जसको पूजा यसभन्दा पूर्व गर्दथे तिनीहरु उनको दृष्टिबाट ओझेल भइहाले ।[४] तथा उनीहरुले बुझिहाले कि अब उनका लागि कुनै बचाव (को मार्ग) छैन ।[५]

---

[१]अर्थात् अल्लाहका अतिरिक्त त्यो घटित हुनुको ज्ञान कसैलाई छैन । यसकारण जब माननीय जिब्रीलले नबी सल्लल्लाहु अलैहि वसल्लमसित केयामत घटित हुने विषयमा प्रश्न गर्नुभो त उहाँले भन्नुभएको थियो «مَا الْمَسْئُولُ عَنْهَا بِأَعْلَمَ مِنَ السَّائِلِ» "यस सन्दर्भमा मलाई पनि त्यति नै ज्ञान छ जति तपाईंलाई छ, म तपाईंभन्दा अधिक जान्दिन ।" (हदीस जिब्रील) अरु स्थानहरुमा अल्लाहले भन्नुभयो : ﴿إِلَىٰ رَبِّكَ مُنتَهَىٰهَآ﴾ (अन्नाजिआत-४४) ﴿لَا يُجَلِّيهَا لِوَقۡتِهَآ إِلَّا هُوَ﴾ (अल-आराफ़-१८७)

[२]यो अल्लाहका पूर्ण तथा व्यापक ज्ञानको वर्णन हो, तथा उसका यस ज्ञान गुणमा कोही त्यसको साक्षी छैन, यहाँसम्मकि अम्बिया (अलैहिमुस्सलाम) पनि होइन । उनलाई पनि त्यति मात्रै ज्ञान हुन्छ जति अल्लाह तआ़ला (परमेश्वर) उनलाई प्रकाशनाद्वारा प्रदान गरिदिन्छ तथा यस प्रकाशनाद्वारा ज्ञानको सम्बन्ध पनि नबूअत (दूतत्व) का फल तथा त्यसका माँगहरुको पूर्तिबाट हुन्छ, न कि अन्य कला एवं विषयहरुसित सम्बन्धित । यसैकारण कुनै पनि नबी तथा रसूललाई चाहे त्यो जतिसुकै मर्यादित होस् 'माकान तथा मायकून (भूत एवं भविष्य) को ज्ञाता' भन्नु वैध (उचित) छैन, किनकि यो मात्र एक अल्लाहको गरिमा एवं विशेषता हो जसमा कुनै अन्यलाई साझीदार मान्नु शिर्क (मिश्रणवाद) हुनेछ ।

[४]अर्थात् उनी यताउता भइहाले तथा अनुमानका अनुसार उनीहरुले कसैलाई लाभ पुऱ्याएनन् ।

[५]यो अनुमान विश्वासका अर्थमा छ । अर्थात् उनी केयामतका दिन विश्वास गर्नमा

لَا يَسْـَٔمُ الْإِنسَانُ مِن دُعَاءِ الْخَيْرِ وَإِن مَّسَّهُ الشَّرُّ فَيَـُٔوسٌ قَنُوطٌ ﴿٤٩﴾

(४९) भलाई माँग्नुबाट मनुष्य थाक्दैन[1] तथा यदि त्यसलाई कुनै कष्ट पुग्दछ भने हतास एवं निराश हुनजान्छ ।[2]

وَلَئِنْ أَذَقْنَاهُ رَحْمَةً مِّنَّا مِن بَعْدِ ضَرَّاءَ مَسَّتْهُ لَيَقُولَنَّ هَٰذَا لِي وَمَا أَظُنُّ السَّاعَةَ قَائِمَةً وَلَئِن رُّجِعْتُ إِلَىٰ رَبِّي إِنَّ لِي عِندَهُ لَلْحُسْنَىٰ ۚ فَلَنُنَبِّئَنَّ الَّذِينَ كَفَرُوا بِمَا عَمِلُوا وَلَنُذِيقَنَّهُم مِّنْ عَذَابٍ غَلِيظٍ ﴿٥٠﴾

(५०) तथा जुन कष्ट उसलाई पुगिसकेको छ, त्यसका पश्चात यदि हामीले उसलाई कुनै दयाको स्वाद चखायौं भने त त्यो भन्नथाल्छ कि म त यसको अधिकारी नै थिए[3] तथा म त विचार गर्न सक्दिन कि केयामत व्याप्त हुनेछ तथा यदि म आफ्ना प्रभुतिर फर्काइए भने पनि निःसन्देह त्यसका पासमा पनि मेरा लागि भलाई हुनेछ ।[4] निःसन्देह हामीले ती

---

बाध्य हुनेछन् कि उनलाई अल्लाहका दण्डबाट बचाउनेवाला कोही छैन । जस्तो अर्को स्थानमा भन्यो :

﴿ وَرَءَا الْمُجْرِمُونَ النَّارَ فَظَنُّوا أَنَّهُم مُّوَاقِعُوهَا وَلَمْ يَجِدُوا عَنْهَا مَصْرِفًا ﴾

"तथा पापी नरकलाई देखेर बुझिहाल्नेछन् कि उनीहरु त्यसैमा हुर्याइनेछन्, किन्तु त्यसबाट बचाउको स्थान पाउने छैनन् ।" (अल-कहफ-५३)

[1]अर्थात् सांसारिक धनसम्पत्ति, स्वास्थ्य एवं बल, मान मर्यादा तथा अन्य सांसारिक सुख-सुविधाको माग गर्नुबाट मानिस थाक्दैन बरु माँगैरहन्छ। मानिसबाट तात्पर्य उनको प्रायतः बहुसंख्यक हो ।

[2]अर्थात् आपदा पुगे पश्चात त तुरुन्त निराश हुन्छ जबकि अल्लाहका निःस्वार्थी भक्तहरुको दशा यसभन्दा विपरीत हुन्छ । एक त उनी संसारका अभिलाषी हुँदैनन् उनका समक्ष प्रत्येक क्षण आख़िरत नै हुन्छ। अर्को कुरो, दुख पुगे भने उनी अल्लाहको दया एवं कृपाबाट निराश हुँदैनन् । उनका समक्ष प्रत्येक क्षण आख़िरत नै हुन्छ। अर्को कुरो, दुख पुगे भने उनी अल्लाहको दया एवं कृपाबाट निराश हुँदैनन् बरु परीक्षाहरुलाई पनि पापहरुको प्रायश्चित तथा पदोन्नतिको कारण मान्दछन् । मानौं निराशा उनका समीप पनि आउँदैन ।

[3]अर्थात् अल्लाहका निकट प्रिय म हुँ, त्यो मसित प्रसन्न छ यसकारण मलाई आफ्ना अनुग्रह प्रदान गरिराखेको छ। हाँलाकि संसारको कमी अधिकता त्यसका प्रेम अथवा प्रसन्नताको लक्षण (चिन्ह) होइन। बरु अल्लाह केवल परीक्षाका लागि यस्तो गर्दछ ताकि त्यसले देखोस् कि सुख-सुविधाहरुमा उसको कृतज्ञ को छ तथा दुखहरुमा धैर्यवान को ?

[4]यो भन्ने व्यक्ति मुनाफ़िक (द्वयवादी) अथवा काफ़िर हो। कुनै ईमानवाला यस्तो कुरा

काफ़िरहरुलाई उनका कर्महरुसित अवगत गर्नेछौं तथा उनलाई कठोर यातनाको स्वाद चखाउनेछौं ।

(५१) तथा जब हामी मनुष्यमाथि उपकार गर्छौं त त्यो विमुख हुनजान्छ तथा पहलु बदलिन्छ;[1] तथा जब उसमाथि दुख आउँछ त बडो लामो-चौडा प्रार्थनाहरु गर्ने बन्नजान्छ ।

وَإِذَآ أَنْعَمْنَا عَلَى ٱلْإِنسَٰنِ أَعْرَضَ وَنَـَٔا بِجَانِبِهِۦ وَإِذَا مَسَّهُ ٱلشَّرُّ فَذُو دُعَآءٍ عَرِيضٍ ﴿٥١﴾

(५२) (तपाईं) यो भन्नुस् कि यो त बताउ कि यदि यो कुर्आन अल्लाहको तर्फबाट आएको छ अनि तिमीले त्यसलाई मानेनौ भने त्यसभन्दा बढी भ्रमित को हुनेछ[3] जो (सत्यबाट) विरोधमा टाढा गइहाल्छ ।[4]

قُلْ أَرَءَيْتُمْ إِن كَانَ مِنْ عِندِ ٱللَّهِ ثُمَّ كَفَرْتُم بِهِۦ مَنْ أَضَلُّ مِمَّنْ هُوَ فِى شِقَاقٍۭ بَعِيدٍ ﴿٥٢﴾

(५३) शीघ्र नै हामीले उनीहरुलाई आफ्ना निशानीहरु संसारका किनाराहरुमा पनि देखाउनेछौं तथा स्वयं उनका आफ्ना अस्तित्वमा पनि, यहाँसम्मकि उनलाई

سَنُرِيهِمْ ءَايَٰتِنَا فِى ٱلْءَافَاقِ وَفِىٓ أَنفُسِهِمْ حَتَّىٰ يَتَبَيَّنَ لَهُمْ أَنَّهُ ٱلْحَقُّ ۗ أَوَلَمْ يَكْفِ بِرَبِّكَ أَنَّهُۥ

भन्नसक्दैन । काफिर नै यो ठान्दछ कि मेरो सांसारिक जीवन सुखमय व्यतीत भइराखेछ भने आखिरतमा पनि मेरा लागि यस्तै हुनेछ ।

[1]अर्थात् सत्यबाट मुख फर्काउन्छ तथा सत्यका पालनाबाट आफ्नो पहलु बदलन्छ तथा घमण्ड देखाउँछ ।

[2]अर्थात् अल्लाहका सदनमा रुन्छ तथा विन्ति गर्दछ ताकि त्यसले आपदाको निवारण गरिदेओस् अर्थात् दुखमा अल्लाहको स्मरण गर्दछ, सुखमा बिर्सिदिन्छ । आपदा आउनुको समय गुहार माँग्दछ, सुविधा प्राप्तिका समय उसलाई त्यो याद रहँदैन ।

[3]अर्थात् यस्तो दशामा तिमीभन्दा अधिक विपथ तथा तिमीभन्दा ठूलो शत्रु को होला ?

[4] شِقَاق को अर्थ हो विरोध, बैर, प्रतिद्वंदता । بَعِيد मिलेर यसमा अतिश्योक्ति हुनजान्छ । अर्थात् जो अत्याधिक विरोध तथा वैरले काम लिन्छ यहाँसम्मकि अल्लाहद्वारा अवतरित गरिएको कुर्आनलाई पनि झुठ्लाइदिन्छ, यसभन्दा बढी कुपथ तथा दुर्भाग्यशाली को हुनसक्छ ?

عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدٌ ﴿٥٣﴾

स्पष्ट हुन्छ कि सत्य यही हो ।[1] के तपाईंको प्रभुबाट प्रत्येक वस्तुसित अवगत हुनु पर्याप्त छैन ।[2]

أَلَا إِنَّهُمْ فِي مِرْيَةٍ مِّن لِّقَاءِ رَبِّهِمْ ۗ أَلَا إِنَّهُ بِكُلِّ شَيْءٍ مُّحِيطٌ ﴿٥٤﴾

(५४) विश्वास गर कि यिनीहरु आफ्ना प्रभुका समक्ष प्रस्तुत हुने कुरोमा सशंकित छन्[3] याद राख कि अल्लाह तआलाले प्रत्येक वस्तुलाई घेरेको छ ।[4]

## سُورَةُ الشُّورَىٰ

## सूरतुश्शूरा-४२

सूर: शूरा मक्कामा अवतरित भएको र यसमा ५३ आयतहरु तथा पाँच रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

[1]जसबाट कुर्आन सत्य तथा अल्लाहको तर्फबाट हुने कुरो स्पष्ट भईहाल्नेछ अर्थात् أَنَّهُ सर्वनाम कुर्आनतिर संकेत छ । केही विद्वानले त्यसलाई इस्लाम अथवा रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमतिर भनेका छन् । सबको मूल एउटै हो । آفَاق यो बहुवचन हो أُفُق को अर्थात् किनारा । अभिप्राय यो हो कि हामीले आफ्ना निशानीहरु बाहिर किनारामा पनि देखाउनेछौं तथा स्वयं मानिसहरुका भित्र पनि । अर्थात् आकाशहरु तथा धर्तीका किनाराहरुमा पनि अल्लाहका सामर्थ्यका ठूला-ठूला निशानीहरु छन्, जस्तै सूर्य, चन्द्रमा, ताराहरु, रात्रि, दिन, गर्जन, चट्याङ, वनस्पतिहरु, जड, रुख, पर्वत, नहर तथा नदीहरु आदि तथा आन्तरिक निशानीहरुमा स्वयं मानवको अस्तित्व जुन मिश्रण, धातु एवं रचनाहरुले युक्त छ, ती अभिप्राय हुन्, जसको विवरण विज्ञान तथा आयूर्वेदको रोमाञ्चक विषय हो । केही ज्ञाताहरु भन्छन् कि आफाकसित अभिप्राय पश्चिम तथा पूर्वका ती दूरस्थ क्षेत्र हुन् जसको विजयलाई अल्लाहले मुसलमानहरुका लागि सरल गरिदियो तथा أَنْفُس सित अभिप्राय स्वयं अरबको धर्ती हो जसमा बद्र तथा मक्का विजय आदि रणहरुमा मुसलमानहरुलाई सम्मान तथा सफलता दिइयो ।

[2]प्रश्न सकारात्मक छ कि अल्लाह आफ्ना भक्तहरुका कर्म एवं कथनलाई देख्नका लागि पर्याप्त छ, तथा त्यसैले यस कुराको साक्ष्य दिराखेको छ कि कुर्आन अल्लाहको वाणी हो जो त्यसका सत्यदूत महामाननीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लममाथि अवतरित भयो ।

[3]यसकारण त्यसका सम्बन्धमा विचार गर्दैनन्, न त्यसका लागि कर्म गर्दछन् तथा न त्यस दिनको कुनै भय उनका हृदयमा छन् ।

[4]यस आधारमा उसका लागि केयामत (प्रलय) लाई घटित गर्नु अलिकति पनि कठिन छैन, किनकि सबै आपत्तिहरुमाथि उसैको प्रभुत्व एवं अधिकार छ । त्यो जस्तो चाहन्छ उनीहरुमा अधिकार गरोस्, गर्दछ तथा गर्न सक्दछ । त्यसलाई कोही रोक्नेवाला छैन ।

حٰمٓ ①

(१) हा. मीम. ।

عٓسٓقٓ ②

(२) ऐन.सीन.क़ाफ ।

كَذٰلِكَ يُوْحِيْٓ اِلَيْكَ وَاِلَى الَّذِيْنَ مِنْ قَبْلِكَ ۙ اللّٰهُ الْعَزِيْزُ الْحَكِيْمُ ③

(३) अल्लाह तआ़ला जो महान तथा हिक्मतवाला छ, यसैप्रकार तिमीतिर तथा तिमीभन्दा पूर्वका मानिसहरुतिर प्रकाशना पठाउँदै गरेको छ ।[1]

لَهٗ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۭ وَهُوَ الْعَلِيُّ الْعَظِيْمُ ④

(४) आकाशहरुका (समस्त) वस्तुहरु तथा जे-जति धर्तीमा छ, सबै उसैको हो तथा त्यो सर्वोच्च एवं महान छ ।

تَكَادُ السَّمٰوٰتُ يَتَفَطَّرْنَ مِنْ فَوْقِهِنَّ وَالْمَلٰۗئِكَةُ يُسَبِّحُوْنَ بِحَمْدِ رَبِّهِمْ وَيَسْتَغْفِرُوْنَ لِمَنْ فِي الْاَرْضِ ۭ اَلَآ اِنَّ اللّٰهَ هُوَ الْغَفُوْرُ الرَّحِيْمُ ⑤

(५) निकट छ कि आकाश आफ्ना माथिबाट च्यातियोस्[2] तथा समस्त फरिश्ताहरु आफ्ना प्रभुको पवित्रता महिमागानका वर्णन गरिराखेका छन् तथा धर्तीवालाहरुका लागि क्षमा-याचना गरिराखेका छन् ।[3] राम्ररी बुझिराख कि अल्लाह (तआ़ला) नै क्षमा गर्नेवाला दया गर्नेवाला छ ।[4]

[1]अर्थात् जुनप्रकार यो कुरआन तिमीतिर अवतरित गरियो, त्यसैप्रकार तिमीभन्दा पहिला अम्बियामाथि ग्रन्थ तथा शास्त्र अवतरित गरिए । प्रकाशना (वह्य) त्यो ईशवाणी हो जो फरिश्ताहरुद्वारा अल्लाह तआ़ला आफ्ना पैग़म्बरहरु (सन्देशवाहक) का पासमा पठाउँदै रहयो । एउटा सहाबी (सहचर) ले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसित प्रकाशना (वह्य) को स्थिति सोधे त उहाँले भन्नुभयो कि कहिले घण्टीको ध्वनिका समान आउँछ तथा यो ममाथि सबभन्दा भारी (बोझिल) हुन्छ । जब यो समाप्त हुन्छ त मलाई याद (कण्ठ) भइसकेको हुन्छ । तथा कहिले फरिश्ता मानवीय रुपमा आउँछ एवं मसित कुरा गर्दछ तथा त्यसले जे भन्दछ स्मरण गरिहाल्दछु । आदरणीय आयशा رضي الله عنها भन्नुहुन्छ कि जब मैले कठिन चिसोमा देखें कि जब वह्यको स्थिति समाप्त हुन्थ्यो त उहाँ पसिनामा भिज्नुहुन्थ्यो तथा उहाँको निधारबाट पसिनाका थोपाहरु खसिराखेका हुन्थे । (सहीह बुख़ारी, बाबु बदइल वह्य)

[2]अल्लाहको महानता तथा प्रतापका कारण ।

[3]यो विषय सूरः मोमिनको आयत संख्या सातमा पनि वर्णित भएको छ ।

[4]आफ्ना मित्र तथा आज्ञाकारीहरुका लागि अथवा सबै भक्तहरुका लागि, किनकि काफ़िर तथा अवज्ञाकारीहरुको तुरुन्त पकड नगर्नु बरु उनलाई

وَالَّذِيْنَ اتَّخَذُوْا مِنْ دُوْنِهٖٓ اَوْلِيَاۗءَ اللّٰهُ حَفِيْظٌ عَلَيْهِمْ ۖ وَمَآ اَنْتَ عَلَيْهِمْ بِوَكِيْلٍ ۝

(६) तथा जसले त्यसका अतिरिक्त अरुहरुलाई कार्यक्षम बनाएका छन् । अल्लाह (तआला) उनीहरुलाई राम्ररी देखिराखेको छ,[1] तथा तपाईं उनका उत्तरदायी हुनुहुन्न ।[2]

وَكَذٰلِكَ اَوْحَيْنَآ اِلَيْكَ قُرْاٰنًا عَرَبِيًّا لِّتُنْذِرَ اُمَّ الْقُرٰى وَمَنْ حَوْلَهَا وَتُنْذِرَ يَوْمَ الْجَمْعِ لَا رَيْبَ فِيْهِ ۭ فَرِيْقٌ فِي الْجَنَّةِ وَفَرِيْقٌ فِي السَّعِيْرِ ۝

(७) तथा त्यसैप्रकार हामीले तपाईंतिर अरबी कुरआनको प्रकाशना गरेका छौं[3] ताकि तपाईं मक्कावासीहरुलाई तथा त्यसका निकटवर्ती क्षेत्रका मानिसहरुलाई सावधान गरिदिनुस्[4] तथा एकत्रित हुनुका दिनसित[5] जसको आगमनमा कुनै सन्देह छैन, तर्साइदिनुस् । एउटा समूह स्वर्गमा हुनेछ तथा एउटा समूह नर्कमा हुनेछ ।[6]

एक निश्चित समयसम्म अवसर दिनु, यो पनि उसको दया तथा क्षमाकै प्रकार हो ।

[1]अर्थात् उनका कर्महरुलाई सुरक्षित गरिराखेको छ ताकि उनलाई त्यसमा प्रतिकार देओस् ।

[2]अर्थात् तपाईं यस कुराको उत्तरदायी हुनुहुन्न कि उनलाई सन्मार्गमा हिंडाइदिनु हुन्छ अथवा पापहरुमा उनको पकड गर्नुहुन्छ बरु यी काम हाम्रा हुन् । तपाईंको कर्तव्य मात्र सन्देश पुऱ्याइदिनु हो ।

[3]अर्थात् हामीले प्रत्येक रसूललाई जस्तै त्यसको समुदायको भाषामा पठायौं त्यसैप्रकार हामीले तपाईंमाथि अरबी भाषामा कुरआन अवतरित गरेका छौं, किनकि तपाईंको जाति यही भाषा बुझ्दछ तथा बोल्दछ ।

[4]أم القرى (उम्मुल कुरा) मक्काको नाम हो । यसलाई 'बस्तीहरुकी आमा) यसकारण भनिएको छ कि यो अरबको सबभन्दा प्राचीन बस्ती हो । जस्तो कि यो सबै प्राचीन बस्तीहरुकी आमा हो जसले यसैबाट जन्म लिएका छन् । तात्पर्य मक्काका निवासी हुन् । و مَنْ حَولها मा त्यसका पश्चिम तथा पूर्वका सबै क्षेत्र सम्मिलित छन् । अर्थात् ती सबैलाई तर्साउनु कि यदि उनी कुफ्र तथा शिर्कबाट फर्केनन् भने त अल्लाहको यातनाका पात्र बन्नेछन् ।

[5]केयामतका दिनलाई एकत्र हुनुका दिन यसकारण भनियो कि त्यसमा अघिल्ला-पछिल्ला सबै मानिस एकत्र हुनेछन् । यसका अतिरिक्त, अत्याचारी एवं पीडित तथा ईमान्दार एवं काफिर सबै एकत्र हुनेछन् तथा आ-आफ्ना कर्मानुसार प्रतिफल अथवा दण्ड पाउनेछन ।

[6]जसले अल्लाहका आदेशहरुको पालन गरेका हुनेछन् तथा त्यसको निषेधित एवं अवैध कुराबाट

وَلَوْ شَآءَ اللّٰهُ لَجَعَلَهُمْ اُمَّةً وَّاحِدَةً وَّلٰكِنْ يُّدْخِلُ مَنْ يَّشَآءُ فِيْ رَحْمَتِهٖ ۭ وَالظّٰلِمُوْنَ مَا لَهُمْ مِّنْ وَّلِيٍّ وَّلَا نَصِيْرٍ ⑧

(८) यदि अल्लाह (तआ़ला) ले चाहेको भए त ती सबैलाई एउटै समुदायको बनाइदिन्थ्यो[1] परन्तु त्यो जसलाई चाहन्छ आफ्नो दयामा सम्मिलित गर्दछ, तथा अत्याचारीहरुको पक्षधर तथा सहायक कोही छैन ।

اَمِ اتَّخَذُوْا مِنْ دُوْنِهٖٓ اَوْلِيَآءَ ۚ فَاللّٰهُ هُوَ الْوَلِيُّ وَهُوَ يُحْيِ الْمَوْتٰى ۡ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ⑨

(९) के तिनीहरुले अल्लाह (तआ़ला) का अतिरिक्त अन्य संरक्षक बनाइहालेका छन्, (वास्तवमा त) अल्लाह (तआ़ला) नै संरक्षक छ, त्यही मृतकहरुलाई जीवित गर्नेछ तथा त्यही प्रत्येक वस्तुमा सामर्थ्यवान छ ।[2]

وَمَا اخْتَلَفْتُمْ فِيْهِ مِنْ شَيْءٍ فَحُكْمُهٗٓ اِلَى اللّٰهِ ۭ ذٰلِكُمُ اللّٰهُ رَبِّيْ

(१०) तथा जुन-जुन कुरामा तिम्रो मतभेद छ त्यसको निर्णय अल्लाह (तआ़ला) तिरै छ,[3] यही अल्लाह मेरो प्रभु हो जसमाथि मैले

टाढा रहेको हुनेछ, त्यो स्वर्गमा, तथा त्यसको अवज्ञा तथा निषेधित कुरा गर्ने नरकमा हुनेछ । यही दुईटा समूह हुनेछन्, तेस्रो समूह हुनेछैन ।

[1]यस दशामा केयामत (प्रलय) का दिन मात्र एउटै समूह हुन्थ्यो अर्थात् ईमान भएका तथा स्वर्गवासीहरुको, किन्तु अल्लाहको हिक्मत तथा इच्छाले यस दबावलाई रुचाएन बरु मानिसहरुको परीक्षाका लागि उसले मानिसहरुलाई विचार तथा रुचि (छुट) को स्वाधीनता दियो । जसले यस स्वाधीनताको सही प्रयोग गर्‍यो, त्यो अल्लाहको दयाको पात्र बन्न पुग्यो तथा जसले यसको गलत प्रयोग गर्‍यो उसले अत्याचार गर्‍यो कि अल्लाहद्वारा प्रदान गरिएको स्वतन्त्रता एवं छुटलाई अल्लाहकै अवज्ञामा प्रयोग गर्‍यो । यसकारण यस्ता अत्याचारीहरुको केयामतका दिन कोही सहायक हुनेछैन ।

[2]जब यो कुरा छ त अल्लाह तआ़ला नै यस योग्य छ कि त्यसलाई संरक्षक तथा कार्यक्षम मानियोस् न कि उनलाई जसका पासमा कुनै अधिकार नै छैन, तथा जो नसुन्ने तथा जवाफ दिनुको शक्ति राख्दछन् न हानि तथा लाभ पुर्‍याउनुको क्षमता ।

[3]यस मतभेदसित अभिप्राय धर्मको मतभेद हो । जस्तै यहूदियत, ईसाईयत तथा इस्लाम आदिमा परस्पर मतभेद छ तथा प्रत्येक धर्मवाला ठूलो दावी गर्दछ कि उसको धर्म सच्चा छ, जबकि सबै धर्म एक समयमा सही हुन सक्दैनन् । सत्यधर्म त मात्र एउटै छ तथा एउटै हुनसक्दछ । संसारमा सच्चा धर्म तथा सन्मार्गको पहिचानका लागि अल्लाहका कुरआन मौजूद छ किन्तु संसारमा मानिस यस ईशवाणीलाई

عَلَيْهِ تَوَكَّلْتُ وَإِلَيْهِ أُنِيبُ ⑩

भरोसा गरेको छु, तथा जसतिर म नतमस्तक हुन्छु ।

فَاطِرُ السَّمٰوٰتِ وَالْأَرْضِ ۚ جَعَلَ لَكُمْ مِّنْ أَنفُسِكُمْ أَزْوَاجًا وَمِنَ الْأَنْعَامِ أَزْوَاجًا ۖ يَذْرَؤُكُمْ فِيهِ ۚ لَيْسَ كَمِثْلِهِ شَيْءٌ ۖ وَهُوَ السَّمِيعُ الْبَصِيرُ ⑪

(११) त्यो आकाश तथा धर्तीलाई सृष्टि गर्नेवाला हो । उसले तिम्रा निम्ति तिम्रो जातिका जोडी बनाएको छ[1] तथा चौपायाहरुको जोडी बनाएको छ;[2] तिमीलाई त्यसले फैलाइराखेको छ,[3] त्यस जस्तो कुनै वस्तु छैन;[4] त्यो सुन्नेवाला देख्नेवाला छ ।

لَهُ مَقَالِيدُ السَّمٰوٰتِ وَالْأَرْضِ ۚ يَبْسُطُ الرِّزْقَ لِمَن يَشَاءُ وَيَقْدِرُ ۚ

(१२) आकाशहरु तथा धर्तीका साँचोहरु उसैको हो,[5] जसको चाहन्छ जीविका विस्तृत

आफ्नो निर्णायक तथा मध्यस्त मान्नलाई तयार छैनन् । अन्ततः त्यस पश्चात केयामत (प्रलय) को दिन नै रहन्छ जसमा अल्लाह यस मतभेदको निर्णय गर्नेछ तथा सच्चाहरुलाई स्वर्गमा एवं अरुहरुलाई नरकमा प्रवेश गराउनेछ ।

[1]अर्थात् यो अल्लाहको अनुग्रह हो कि तिम्रो जाति नै उसले तिम्रा जोडी बनाए अन्यथा यदि तिम्रा पत्नीहरु मानिसका अतिरिक्त कुनै अन्य जातिबाट बनाइन्थे भने तिमीलाई यो शान्ति प्राप्त हुन्नथ्यो जो आफ्नो सहजाति तथा समरुप पत्नीबाट प्राप्त हुन्छ ।

[2]अर्थात् जोडी बनाउने (भाले-पोथी) को यही क्रम हामीले चौपायाहरुमा पनि राखेका छौं । चौपायासित अभिप्राय तिनै भाले-पोथी आठ जनावर हुन् जसको वर्णन सूरतुल अन्आममा गरिएको छ ।

[3]يَذْرَؤُكُمْ को अर्थ फैलाउनु अथवा पैदा गर्नु हो, अर्थात् तिमीलाई अधिकताले फैलाइराखेको छ अथवा सन्तानका पश्चात सन्तान पैदा गरिराखेको छ, मानवीय वंशलाई पनि । فِيهِ को अर्थमा छ في ذالك الخلق على هـذه الصفة अर्थात् यस पैदाईशमा यस रीतिले तिमीलाई आरम्भदेखि पैदा गर्दै आइरहेको छ । अथवा 'माताका गर्भाशयमा' अथवा पेटमा अभिप्राय हो, अथवा فِيهِ यो بِهِ का अर्थमा छ । अर्थात् तिम्रो जोडी बनाउनका कारणले तिमीलाई पैदा गर्दछ तथा फैलाउँछ किनकि यो जोडी बनाउनका कारणले तिमीलाई पैदा गर्दछ तथा फैलाउँछ किनकि यो जोडी हुनु नै सन्तानको कारण हो । (फ़तहुल क़दीर तथा इब्ने कसीर)

[4]न अस्तित्वमा न विशेष गुणहरुमा । अतः त्यो आफ्नो सदृश्य स्वयं नै हो एक तथा निस्पृह ।

[5] مَقَالِيدُ यो مِقْلَادٌ - مِقْلِيدٌ को बहुवचन हो, कोष अथवा साँचोहरु ।

إِنَّهُۥ بِكُلِّ شَيْءٍ عَلِيمٌ ⑫

गरिदिन्छ तथा संकुचित गरिदिन्छ । निःसन्देह त्यो प्रत्येक वस्तुको ज्ञाता छ ।

شَرَعَ لَكُم مِّنَ الدِّينِ مَا وَصَّىٰ بِهِۦ نُوحًا وَالَّذِيٓ أَوْحَيْنَآ إِلَيْكَ وَمَا وَصَّيْنَا بِهِۦٓ إِبْرَٰهِيمَ وَمُوسَىٰ وَعِيسَىٰٓ أَنْ أَقِيمُوا الدِّينَ وَلَا تَتَفَرَّقُوا فِيهِ كَبُرَ عَلَى الْمُشْرِكِينَ مَا تَدْعُوهُمْ

(१३) अल्लाह (तआला) ले तिम्रा लागि त्यही धर्म निर्धारित गरिदिएको छ जसलाई स्थापित गर्नुको उसले नूह (अलैहिस्सलाम) लाई आदेश दिएको थियो, जो (प्रकाशनाद्वारा) हामीले तिमीतिर पठाएका छौं तथा जसको विशेष आदेश हामीले इब्राहीम तथा मूसा एवं ईसा (अलैहिमुस्सलाम) लाई दिएका थियौं ।[1] कि यस धर्मलाई स्थापित राख्नु[2] तथा यसमा फुट नपार्नु ।[3] जुन वस्तु

[1] شَرَعَ को अर्थ हो वर्णन गऱ्यो, स्पष्ट गऱ्यो तथा निर्धारित गऱ्यो, لَكُم तिम्रा लागि । यो मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) का समुदायसित सम्बोधन छ । अभिप्राय हो कि तिम्रा लागि त्यही धर्म नियुक्त गरेका छौं जसको आदेश यसभन्दा पूर्व सबै अम्बियालाई दिने गरिएको छ । यस सन्दर्भमा केही श्रेष्ठ अम्बियाका नामको वर्णन गऱ्यौं ।

[2] الدِّين (अद्दीन) सित अभिप्राय अल्लाहका प्रति ईमान, तौहीद (अद्वैत), रसूलको अनुपालन तथा ईश्वरीय धर्म-विधानलाई मान्नु हो । सबै अम्बिया (ईशदूतहरु) को यही धर्म थियो जसको आमन्त्रण उनी आफ्नो जातिलाई दिइरहे । यद्यपि प्रत्येक नबीका धर्म-विधान तथा तरीकामा आंशिक मतभेद हुन्थ्यो, जस्तो कि भन्यो :

﴿لِكُلٍّ جَعَلْنَا مِنكُمْ شِرْعَةً وَمِنْهَاجًا﴾

"तिमीमध्ये प्रत्येकका लागि हामीले एक विधान तथा मार्ग निर्धारित गरिदिएका छौं ।" (अल-मायेदा-४८)

किन्तु उपरोक्त नियम सबैमा साझा थिए । यसै कुरालाई नबी सल्लल्लाहु अलैहि वसल्लमले यी शब्दहरुमा वर्णित गर्नुभयो कि हामी अम्बियाको समूह एक पिताको सन्तान हो, हाम्रो धर्म एक हो । (सहीह बुखारी आदि) तथा यो एक धर्म त्यही तौहीद अद्वैत) तथा रसूलको अनुपालन हो । अर्थात् यिनको सम्बन्ध ती आंशिक समस्याहरुसित होइन जसमा प्रमाण परस्पर भिन्न तथा विपरीत हुन्छन्, किनकि तिनमा प्रयत्न अथवा मतभेदको छुट हुन्छ तथा यी विभिन्न हुन्छन् तथा हुनसक्छन् । परन्तु तौहीद एवं अनुपालन आंशिक होइन, मूल समस्या हो जसमाथि कुफ्र एवं ईमान निर्भर छ ।

[3] मात्र एक अल्लाहको इबादत तथा उसैको आज्ञापालन (अथवा त्यसका रसूलको

إِلَيْهِ ۚ اللَّهُ يَجْتَبِي إِلَيْهِ مَن يَشَاءُ وَيَهْدِي إِلَيْهِ مَن يُنِيبُ ﴿١٣﴾

तिर तपाईं उनीहरुलाई बोलाइराख्नु भएको छ, त्यो त (ती) मिश्रणवादीहरुमाथि भारी (गह्रुङ्गो) हुन्छ ।[1] अल्लाह (तआला) जसलाई चाहन्छ आफ्नो रोजिएको बनाउँछ[2] तथा जो पनि उसतिर ध्यानमग्न हुन्छ त्यसले उनको उचित मार्गदर्शन गर्दछ ।[3]

وَمَا تَفَرَّقُوا إِلَّا مِن بَعْدِ مَا جَاءَهُمُ الْعِلْمُ بَغْيًا بَيْنَهُمْ ۚ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِن رَّبِّكَ إِلَىٰ أَجَلٍ مُّسَمًّى لَّقُضِيَ بَيْنَهُمْ ۚ وَإِنَّ الَّذِينَ أُورِثُوا الْكِتَابَ مِن بَعْدِهِمْ لَفِي شَكٍّ مِّنْهُ مُرِيبٍ ﴿١٤﴾

(१४) तथा उनीहरुले आफ्नो पासमा ज्ञान आइहाल्नुका पश्चात मतभेद गरे (तथा त्यो पनि) आपसी हठधर्मीले,[4] तथा यदि तपाईंका प्रभुको कुरा एक निश्चित समयसम्मका लागि पूर्वबाटै निर्धारित नगरिएको भए त निःसन्देह उनको निर्णय भइसकेको हुन्थ्यो,[5] तथा जसलाई उनका पश्चात किताब प्रदान गरिएको छ उनी पनि त्यसतिरबाट सन्देह तथा असमंजस्यमा परेका छन् ।[6]

अनुपालन जो वास्तवमा अल्लाहकै आज्ञापालन हो) एकता तथा मेलजोलको आधार हो तथा त्यसको उपासना तथा आज्ञापालनबाट भाग्नु अथवा यिनमा अरुहरुलाई साझीदार बनाउनु फुट एवं विच्छिन्नताको कारण हो, "जसबाट फुट नपार्ने" भनेर रोकिएको छ ।

[1]तथा त्यो त्यही तौहीद एवं अल्लाह तथा रसूलको आज्ञापालन हो ।

[2]अर्थात् जसलाई मार्गदर्शनको पात्र ठान्दछ, त्यसलाई मार्गदर्शनका लागि चैन गरिहाल्छ ।

[3]अर्थात् आफ्नो धर्म अप्नाउन तथा इबादतलाई अल्लाहका लागि विशुद्ध गर्नुको सौभाग्य त्यसलाई दिन्छ जो त्यसका आज्ञापालन तथा उपासनातिर ध्यान गर्दछ ।

[4]अर्थात् उनीहरुले विरोध तथा फुटको मार्ग ज्ञान अर्थात् मार्गदर्शन आउनु तथा तर्क पूरा भइहाल्नुका पश्चात अप्नाए जबकि फुट (विरोध) को कुनै औचित्य शेष रहँदैन किन्तु मात्र शत्रुता, हठधर्मी तथा ईर्ष्याका कारण यस्तो गरे । यसबाट केही विद्वानले यहूद तथा केही मक्काका कुरैश तात्पर्य लिएका छन् ।

[5]अर्थात् यदि उनका विषयमा दण्डमा विलम्बको निर्णय नभएको भए त तत्क्षण प्रकोप पठाएर उनको विनाश गरिदिइन्थ्यो ।

[6]यसबाट अभिप्राय यहूदी तथा ईसाई हुन् जो आफूभन्दा पहिलाका यहूदी तथा ईसाईहरुका

فَلِذٰلِكَ فَادْعُ ۚ وَاسْتَقِمْ كَمَآ اُمِرْتَ ۚ وَلَا تَتَّبِعْ اَهْوَآءَهُمْ ۚ وَقُلْ اٰمَنْتُ بِمَآ اَنْزَلَ اللّٰهُ مِنْ كِتٰبٍ ۚ وَ اُمِرْتُ لِاَعْدِلَ بَيْنَكُمْ ؕ اَللّٰهُ رَبُّنَا وَرَبُّكُمْ ؕ لَنَآ اَعْمَالُنَا وَلَكُمْ اَعْمَالُكُمْ ؕ لَا حُجَّةَ بَيْنَنَا وَبَيْنَكُمْ ؕ اَللّٰهُ يَجْمَعُ بَيْنَنَا ۚ وَاِلَيْهِ الْمَصِيْرُ ﴿١٥﴾

(१५) तसर्थ तपाईं मानिसहरुलाई त्यतैतिर बोलाउँदै रहनुस्, तथा जे-जति तपाईंसित भनिएको छ, त्यसमा दृढताले रहनुस्,[1] तथा तिनका इच्छाहरुमा नहिंड्नुस्,[2] तथा भनिदिनुस् कि अल्लाह तआलाले जति किताबहरु अवतरित गर्नुभएको छ, मेरो तिनीमाथि ईमान छ, तथा मलाई आदेश दिइएको छ कि तिमीसित न्याय[3] गरिरहून् । हाम्रो तथा तिमी सबैको प्रभु अल्लाह नै हो । हाम्रा कर्म हाम्रा लागि छन् तथा तिम्रा कर्म तिम्रा लागि छन् । हामी तिमीमा कुनै विवाद छैन । अल्लाह (तआला) हामी सबैलाई एकत्रित गर्नेछ तथा उसैतिर फर्केर जानुछ ।

وَالَّذِيْنَ يُحَآجُّوْنَ فِى اللّٰهِ مِنْۢ بَعْدِ مَا اسْتُجِيْبَ لَهٗ حُجَّتُهُمْ دَاحِضَةٌ عِنْدَ رَبِّهِمْ وَعَلَيْهِمْ غَضَبٌ

(१६) तथा जो मानिस अल्लाह (तआला) का कुराहरुमा झगडा पार्छन् यसका पश्चात कि (सृष्टि) त्यसलाई मानिसकेको[4] छ, तिनका विवाद

---

पश्चात किताब अर्थात् धर्मशास्त्र तौरात तथा इंजीलका उत्तराधिकारी बनाइए अथवा अरबवासी अभिप्राय छन् जसमा अल्लाह तआलाले आफ्नो पवित्र कुर्आन अवतरित गऱ्यो तथा उनीहरुलाई कुर्आनको उत्तराधिकारी बनायो । पहिला अर्थका अनुसार الكِتَاب (अलकिताब) सित अभिप्राय तौरात तथा इंजील एवं अर्को भावार्थानुसार यसबाट तात्पर्य पवित्र कुर्आन हो ।

[1]अर्थात् यस फुट तथा शंकाका कारण जसको चर्चा पहिले भयो जसको खण्डन गर्नको लागि तपाईं उनलाई तौहीदको दावत (आमन्त्रण) दिनुस् तथा त्यसमाथि अडिग रहनुस् ।

[2]अर्थात उनले आफ्नो इच्छाले जुन कुरा गढेका छन् जस्तो मूर्तिपूजा आदि, यसमा उनका आकांक्षाहरुका पछाडी नहिंड्नुस् ।

[3]अर्थात् जहिलेपनि तिमी आफ्नो कुनै विवाद (समस्या) मेरो पासमा ल्याउनेछौ भने अल्लाहका आदेशहरुका अनुसार त्यसको न्यायका साथ निर्णय गरिदिनेछु ।

[4]अर्थात् कुनै झगडा छैन किनकि सत्य स्पष्ट भइसकेको छ ।

[5]अर्थात् यी मूर्तिपूजक मुसलमानहरुसित लड्छन्, झगड्छन्, जसले अल्लाह तथा रसूलको कुरा मानिहालेका छन् ताकि उनलाई फेरि सन्मार्गबाट विचलित गरिदेऊन् । अथवा अभिप्राय यहूदी तथा इसाई हुन् जो मुसलमानहरुसित

وَلَهُمْ عَذَابٌ شَدِيدٌ ﴿١٦﴾

अल्लाहका निकट असत्य छ ।[1] तथा उनीमाथि क्रोध छ तथा उनका लागि कठोर यातनाहरु छन् ।

اللَّهُ الَّذِي أَنزَلَ الْكِتَابَ بِالْحَقِّ وَالْمِيزَانَ ۗ وَمَا يُدْرِيكَ لَعَلَّ السَّاعَةَ قَرِيبٌ ﴿١٧﴾

(१७) अल्लाह (तआला) ले सत्यका साथ किताब अवतरित गरको छ तथा तराजू पनि (उतारेको छ)[2] तथा तपाईंलाई के थाहा कि शायद क़्यामत निकट नै छ ।[3]

يَسْتَعْجِلُ بِهَا الَّذِينَ لَا يُؤْمِنُونَ بِهَا ۖ وَالَّذِينَ آمَنُوا مُشْفِقُونَ

(१८) त्यसको शीघ्रता उनीहरुलाई परेको छ, जो त्यसमाथि ईमान स्वीकार गर्दैनन् ।[4] जो त्यसमाथि विश्वास

झगडा गर्दथे तथा भन्दथे कि हाम्रो धर्म तिम्रो धर्मभन्दा उत्तम छ तथा हाम्रो नबी तिम्रो नबीभन्दा पहिला भएको छ, यसकारण हामी तिमीभन्दा उत्तम छौं ।

[1] دَاحِضَةٌ को अर्थ, कमजोर, बातिलसित छन् जसलाई टिक्नु छैन ।

[2] الْكِتَاب (अलकिताब) सित अभिप्राय जातिवाचक धर्मग्रन्थ हो अर्थात सबै पैगम्बरहरुमाथि जति पनि किताबहरु अवतरित भए, ती सबै सत्य थिए अथवा विशेषरुपले पवित्र कुरआन अभिप्राय छ, तथा त्यसको सत्यतालाई स्पष्ट गरिदैछ । مِيزَان (मीज़ान-तुला) सित तात्पर्य निसाफ तथा न्याय छ । न्यायलाई तुला यसकारण भनियो कि यो बराबरी तथा निसाफको यन्त्र (साधन) हो । यसका समानार्थी यी आयात पनि हुन् ।

﴿لَقَدْ أَرْسَلْنَا رُسُلَنَا بِالْبَيِّنَاتِ وَأَنزَلْنَا مَعَهُمُ الْكِتَابَ وَالْمِيزَانَ لِيَقُومَ النَّاسُ بِالْقِسْطِ﴾

"नि:सन्देह हामीले आफ्ना सन्देष्टाहरुलाई स्पष्ट प्रमाण दिएर पठायौं तथा उनका सात ग्रन्थ एवं न्याय अवतरित गर्‍यौं ताकि मानिसहरु न्यायमा स्थापित रहून् ।" (सूर: अल-हदीद-२५)

﴿وَالسَّمَاءَ رَفَعَهَا وَوَضَعَ الْمِيزَانَ * أَلَّا تَطْغَوْا فِي الْمِيزَانِ * وَأَقِيمُوا الْوَزْنَ بِالْقِسْطِ وَلَا تُخْسِرُوا الْمِيزَانَ﴾

"उसैले आकाशलाई उच्च गर्‍यो तथा उसैले तुला स्थापित गर्‍यो ताकि तिमी तौलनुमा घटी-बढी नगर । न्यायका साथ वजनलाई ठीक राख तथा तौलमा कमी नगर ।"(सूर: रहमान-७-९)

[3] قريب पुरुषालिङ्ग तथा स्त्रीलिङ्ग विशेषणका लागि आउँछ । ﴿إِنَّ رَحْمَتَ اللَّهِ قَرِيبٌ مِّنَ الْمُحْسِنِينَ﴾ (फ़तहुल क़दीर)

[4] अर्थात् परिहास स्वरुप यो ठान्दै कि यो आउनु नै कहाँ छ ? यसकारण भन्दछन्

مِنْهَا وَيَعْلَمُونَ أَنَّهَا الْحَقُّ أَلَا إِنَّ الَّذِينَ يُمَارُونَ فِي السَّاعَةِ لَفِي ضَلَالٍ بَعِيدٍ ﴿١٨﴾

राख्दछन् । उनी त त्यससित तर्सि[1]रहेछन् एवं उनलाई त्यो सत्य हुनुको पूर्ण ज्ञान छ । याद राख जो मानिस केयामतका विषयमा लडाई-भ्रगडा गरिराखेका छन्[2] उनीहरु टाढाको पथ-विचलनमा परेका छन् ।[3]

اللَّهُ لَطِيفٌ بِعِبَادِهِ يَرْزُقُ مَن يَشَاءُ وَهُوَ الْقَوِيُّ الْعَزِيزُ ﴿١٩﴾

(१९) अल्लाह (तआला) आफ्ना भक्तहरुमाथि ठूलो कृपा गर्नेवाला छ, जसलाई चाहन्छ अत्याधिक जीविका प्रदान गर्दछ । तथा त्यो अति शक्तिशाली, अति प्रभावशाली छ ।

مَن كَانَ يُرِيدُ حَرْثَ الْآخِرَةِ نَزِدْ لَهُ فِي حَرْثِهِ وَمَن كَانَ يُرِيدُ حَرْثَ الدُّنْيَا نُؤْتِهِ

(२०) जसको विचार आखिरतको खेती छ हामीले त्यसलाई त्यसको खेतीमा अभै वृद्धि गर्नेछौं[4] तथा जो सांसारिक खेतीको कामना गर्दछ

---

कि केयामत शीघ्र आओस् ।

[1]यसकारण कि एक त उनलाई त्यसको हुने कुरोमा विश्वास छ । दोस्रो उनलाई भय छ कि त्यस दिन निष्पक्ष हिसाब हुनेछ, कहीं उनी पनि अल्लाहको पकडमा नआइहालून् जस्तो अर्को स्थानमा आएको छ :

﴿وَالَّذِينَ يُؤْتُونَ مَا آتَوا وَّقُلُوبُهُمْ وَجِلَةٌ أَنَّهُمْ إِلَىٰ رَبِّهِمْ رَاجِعُونَ﴾

"तथा जो मानिस दिन्छन् जे-जति दिन्छन्, तथा उनका हृदय कम्पित हुन्छन् कि उनी आफ्ना प्रभुतिर फर्कनेछन् ।" (अल-मोमिनून-६०)

[2] يُمَارُون (युमारुन) مُمَارَاةٌ बाट बनेको छ । जसको अर्थ लड्नु-भ्रगड्नु हो । अथवा مِرْيَةٌ (मिर्यतुन) सित छ जसको अर्थ शंका तथा सन्देह हो ।

[3]यसकारण कि उनी तर्कहरुमा चिन्तन-मनन गर्दैनन् जो ईमान स्थापित हुनुका कारण बन्न सक्दछन् जबकि यो प्रमाण रात-दिन उनका दर्शनमा आउँछन्, उनका आँखाहरुबाट गुज्रन्छन् तथा उनको बुद्धि एवं बोधमा आउन सक्छन् । अतः उनी सत्यबाट धेरै टाढा परिसकेका छन् ।

[4] حَرْثٌ को अर्थ बीउ छर्नु हो । यहाँ रुपकका रुपमा कर्महरुका फल तथा लाभमाथि भनिएको छ । अभिप्राय यो हो कि जो व्यक्ति संसारमा कर्म तथा श्रमद्वारा परलोकका पुण्य तथा प्रतिफलको अभिलाषी छ त अल्लाह तआला त्यसको परलोकको खेतीमा यसप्रकार बढाउने छ कि एक सत्कर्मको पुण्य दस गुनाबाट लिएर सात सय गुनासम्म पनि प्रदान गर्नेछ ।

مِنْهَا ۙ وَمَا لَهٗ فِي الْاٰخِرَةِ مِنْ نَّصِيْبٍ ﴿٢٠﴾

हामीले उसलाई त्यसैमध्येबाट नै केही दिइदिनेछौं ।[1] यस्ता व्यक्तिको आख़िरत (परलोक) मा कुनै भाग छैन ।[2]

اَمْ لَهُمْ شُرَكٰٓؤُا شَرَعُوْا لَهُمْ مِّنَ الدِّيْنِ مَا لَمْ يَأْذَنْۢ بِهِ اللّٰهُ ؕ وَلَوْلَا كَلِمَةُ الْفَصْلِ لَقُضِيَ بَيْنَهُمْ ؕ وَاِنَّ الظّٰلِمِيْنَ لَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٢١﴾

(२१) के तिनीहरुले यस्ता (अल्लाहका) साझीदार (निर्धारित गरेका) छन् जसले यस्ता धार्मिक आदेश निर्धारित गरिदिएका छन्, जो अल्लाहद्वारा भनिएका होइनन् ।[3] यदि निर्णयका दिनको वचन नभएको भए त (अहिले नै) उनीहरुमा निर्णय गरिदिइन्थ्यो । नि:सन्देह (ती) अत्याचारीहरुका लागि नै कष्टदायी यातनाहरु छन् ।

تَرَى الظّٰلِمِيْنَ مُشْفِقِيْنَ مِمَّا كَسَبُوْا وَهُوَ وَاقِعٌۢ بِهِمْ ؕ وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فِيْ رَوْضٰتِ الْجَنّٰتِ ۚ لَهُمْ

(२२) तपाईंले देख्नुहुनेछ कि (यी) अत्याचारी आफ्ना कर्महरुसित तर्सिरहेका हुनेछन्[4] जो नि:सन्देह उनीमाथि घटित हुनेवाला छ ।[5] तथा जो मानिस ईमान स्वीकार गरे तथा उनीहरुले पुण्यका कार्य पनि गरे उनीहरुले

---

[1]अर्थात् संसारका अभिलाषीलाई संसार त प्राप्त हुन्छ किन्तु यति होइन जति त्यो चाहन्छ, बरु त्यति नै प्राप्त हुन्छ जति अल्लाहको इच्छा तथा भाग्य-लेखका अनुसार हुन्छ ।

[2]यो त्यही विषय हो जो सूर: बनी इस्राईल १८ पनि वर्णित भएको छ । अभिप्राय यो हो कि संसारमा त अल्लाह प्रत्येकलाई अवश्य दिन्छ जति उसले लेखिदिएको छ, किनकि उसले सबै जीविकाको भार लिएको छ, संसारका इच्छुकको पनि तथा परलोकको इच्छुकको पनि । तैपनि जो परलोकको आर्जन एवं श्रम गर्नेछ त क़्यामतका दिन परमेश्वर उसलाई कैयन् गुना पुण्य तथा प्रतिफल प्रदान गर्नेछ, जबकि संसारमा अभिलाषीका लागि परलोकमा नरकको यातनाका बाहेक केही हुनेछैन । अब यो मानिसलाई स्वयं सोच्नुपर्छ कि उसको लाभ माया-मोहमा छ अथवा परलोकको इच्छुक बन्नुमा ।

[3]अर्थात् शिर्क तथा पाप, जसको आज्ञा अल्लाहले दिएको छैन उनीद्वारा बनाइएका साझेदारहरुले मानिसहरुलाई यस मार्गमा लगाइदिएका छन् ।

[4]अर्थात् केयामतका दिन ।

[5]हाँलाकि तर्सनु व्यर्थ हुनेछ किनकि आफूद्वारा गरिएका दण्ड त उनीहरुलाई प्रत्येक दशामा भोग्नुपर्नेछ ।

مَا يَشَآءُونَ عِندَ رَبِّهِمْ ۚ ذَٰلِكَ هُوَ الْفَضْلُ الْكَبِيرُ ﴿٢٢﴾

स्वर्गका बगैंचाहरुमा हुनेछन्, उनीहरुले जे इच्छा गर्नेछन् आफ्ना प्रभुका पास उपस्थित पाउनेछन्, यही हो महान अनुग्रह ।

ذَٰلِكَ الَّذِي يُبَشِّرُ اللَّهُ عِبَادَهُ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ ۗ قُل لَّا أَسْأَلُكُمْ عَلَيْهِ أَجْرًا إِلَّا الْمَوَدَّةَ فِي الْقُرْبَىٰ ۗ وَمَن يَقْتَرِفْ حَسَنَةً نَّزِدْ لَهُ فِيهَا

(२३) यही त्यो हो जसको शुभ-सूचना अल्लाह (तआला) आफ्ना ती भक्तहरुलाई दिइराखेको छ, जसले ईमान स्वीकार गरे तथा (पवित्र कुर्आन र सुन्नतका अनुसार) कर्म गरे, त भनिदिनुस् कि म त्यसमा तिमीसित कुनै बदला (साटो) चाहँदिन परन्तु नातोदारीको प्रेम,[1] र जो व्यक्ति पुण्य गर्दछ हामीले त्यसका

[1]कुरैशका गोत्र तथा नबी सल्लल्लाहु अलैहि वसल्लममा नातेदारीको सम्बन्ध थियो । आयतको अभिप्राय पूर्णत: स्पष्ट छ कि धर्मका प्रचार-प्रसार तथा शिक्षा-दीक्षामा कुनै बदला (साटो) चाहँदिन । हो, एउटा वस्तुको प्रश्न अवश्य छ कि मेरा तथा तिम्रा बीच जुन नातेदारी छ, त्यसमाथि ध्यान देउ । तिमी मेरो कुरा मान्दैनौ भने नमान, किन्तु मलाई क्षति पुऱ्याउनबाट त रोकिराख । तिमी मेरा सहायक बन्न सक्दैनौ त सम्बन्धीका नाताले मलाई कष्ट नदेउ तथा मेरा मार्गमा बाधा नबन कि म रिसालत (उपदेश पुऱ्याउन) को दायित्व पूरा गर्न सकूँ । आदरणीय इब्ने अब्बास रज़ियल्लाहु अन्हुमाले यसको अर्थ लिएका छन् कि मेरा तथा तिम्रामध्ये जो निकटता तथा सम्बन्ध छ, त्यसलाई स्थापित राख । (सहीह बुख़ारी, तफ़सीर सूरतिश्शूरा) नबी सल्लल्लाहु अलैहि वसल्लमको परिवार निश्चय वंशका आधारमा संसारको श्रेष्ठतम् परिवार हो जससित प्रेम, त्यसको सम्मान तथा आदर ईमानको अंश हो, यसकारण कि नबी सल्लल्लाहु अलैहि वसल्लमले आफ्ना कथन (हदीसहरु) मा उनका सम्मान तथा सुरक्षामाथि जोड दिनु भएको छ । किन्तु यस आयतको कुनै संम्बन्ध त्यस विषयसित छैन जस्तो कि शियाहरु तानेर यस आयतलाई नबी सल्लल्लाहु अलैहि वसल्लमका परिवारका प्रेमका साथ जोडेर परिवारलाई पनि सीमित गर्दछन्, अनि उहाँका परिवारलाई पनि उनीहरुले आदरणीय अली तथा फ़ातिम एवं हसन-हुसैनसम्म सीमित गरिदिएका छन् । साथै प्रेमको अर्थ पनि उनका निकट यो हो कि उनलाई निष्पाप तथा ईश्वरीय अधिकारहरुले युक्त मानियोस् । यसका अतिरिक्त मक्काका काफ़िरहरुबाट आफ्ना परिवार प्रेमको माँग आमन्त्रणका पारिश्रमिक (मजदूरी) स्वरुप अति विचित्र कुरो छ, उहाँ सल्लल्लाहु अलैहि वसल्लमको उच्चतम् मर्यादाभन्दा निकै पतित छ, उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) का आमन्त्रणलाई स्वीकार नगर्नका बावजूद उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) को माग त केवल निकटता एवं सम्बन्धित हुनुका आधारमा प्रेम स्थापित राख्नु थियो । अनि यो आयत तथा सूर: मक्की हो जबकि आदरणीय अली (रज़ियल्लाहु अन्हु) तथा फ़ातिमा (रज़ियल्लाहु अन्हा) का बीच विवाह बन्धन पनि स्थापित भएको थिएन ।

حُسْنًا ۭ اِنَّ اللّٰهَ غَفُوْرٌ شَكُوْرٌ ﴿٢٣﴾

पुण्यमा अझै अधिक बढाइदिनेछौं ।[1] निश्चय नै अल्लाह (तआला) अत्यन्त क्षमाशील तथा अत्याधिक गुणग्राही छ ।[2]

اَمْ يَقُوْلُوْنَ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا ۚ فَاِنْ يَّشَاِ اللّٰهُ يَخْتِمْ عَلٰى قَلْبِكَ ۭ وَيَمْحُ اللّٰهُ الْبَاطِلَ وَيُحِقُّ الْحَقَّ بِكَلِمٰتِهٖ ۭ اِنَّهٗ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ﴿٢٤﴾

(२४) के यिनी भन्दछन् (कि पैग़म्बरले) अल्लाहमाथि मिथ्यारोपण गरिहालेका छन् यदि अल्लाह (तआ़ला) चाहन्छ भने तपाईंका हृदयमा मोहर लगाइदिन्छ[3] तथा अल्लाह (तआ़ला) आफ्ना कुराहरुबाट असत्यलाई मेटाइदिन्छ[4] तथा सत्यलाई सिद्ध राख्दछ । त्यो छातिभित्रका कुराहरु जान्दछ ।

وَهُوَ الَّذِيْ يَقْبَلُ التَّوْبَةَ عَنْ عِبَادِهٖ وَيَعْفُوْا عَنِ السَّيِّاٰتِ

(२५) तथा त्यही हो जो आफ्ना भक्तहरुको क्षमा-याचनालाई स्वीकार गर्दछ[5] तथा पापहरुलाई

---

अर्थात् अहिले त्यो घराना अस्तित्वमा नै आएको थिएन जसका स्वयं कृत प्रेमको सिद्धि यस आयतमा गर्न सकिन्छ ।

[1]अर्थात् पुण्य एवं प्रतिफल बढाउनेछौं । अथवा नेकीको साटो अत्याधिक नेकी गर्नुको सन्मति स्वरुप प्रदान गर्नेछौं जस्तै नराम्रोको साटो अत्याधिक नराम्राहरु गर्नु हो ।

[2]अत: त्यो पर्दा पार्दछ तथा क्षमा गरिदिन्छ तथा अधिकभन्दा अधिक प्रतिफल प्रदान गर्दछ ।

[3]अर्थात् यस आरोपमा यदि सच्चाई भएको भए त हामीले तपाईंका हृदयमा मोहर लगाइदिन्थ्यौं जसबाट त्यो कुरआन नै मेटिएर जान्थ्यो, जसलाई रच्ने कुरालाई तपाईंसित सम्बन्धित गरिन्छ । अभिप्राय यो हो कि हामीले तपाईंलाई कडा यातना दिन्थ्यौं ।

[4]यो कुरआन पनि यदि असत्य भएको भए (जस्तो कि झुठ्लाउनेहरुको दाबी छ) त निश्चय अल्लाह तआलाले त्यसलाई पनि मेटाइदिन्थ्यो जस्तो कि त्यसको नीति छ ।

[5]तौबाको अभिप्राय हो पापमाथि पश्चाताप तथा लज्जित हुनु तथा भविष्यमा त्यसलाई नगर्नुको संकल्प । केवल मुखले तौबा-तौबा गर्नु अथवा त्यस पाप तथा अवज्ञाका कर्मलाई त नछाड्नु तथा तौबाको प्रदर्शन गर्नु तौबा होइन । यी उपहास तथा परिहास हो । तैपनि शुद्ध तथा साँचो तौबा अल्लाह अवश्य स्वीकार गर्दछ ।

وَ يَعْلَمُ مَا تَفْعَلُوْنَ ﴿٢٥﴾

क्षमा गर्दछ, तथा जे-जति तिमी गरिराखेका छौ, सबै जान्दछ ।

وَ يَسْتَجِيْبُ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَيَزِيْدُهُمْ مِّنْ فَضْلِهٖ ؕ وَالْكٰفِرُوْنَ لَهُمْ عَذَابٌ شَدِيْدٌ ﴿٢٦﴾

(२६) तथा ईमानवाला एवं सदाचारीहरुको कुरा सुन्दछ[1] तथा उनीहरुलाई आफ्नो कृपाले अझै अधिक प्रदान गर्दछ तथा काफिरहरुका लागि कठोर यातना छ ।

وَلَوْ بَسَطَ اللّٰهُ الرِّزْقَ لِعِبَادِهٖ لَبَغَوْا فِى الْاَرْضِ وَلٰكِنْ يُّنَزِّلُ بِقَدَرٍ مَّا يَشَآءُ ؕ اِنَّهٗ بِعِبَادِهٖ خَبِيْرٌۢ بَصِيْرٌ ﴿٢٧﴾

(२७) तथा यदि अल्लाह (तआला) आफ्ना सबै भक्तहरुको जीविका विस्तृत गरिदिएको भए त उनीहरु धर्तीमा उपद्रव मच्चाइ[2] दिन्थे, परन्तु त्यो अनुमानले जे-जति चाहन्छ अवतरित गर्दछ । त्यो आफ्ना भक्तहरुसित राम्ररी सूचित छ तथा राम्ररी देख्नेवाला छ ।

وَهُوَ الَّذِىْ يُنَزِّلُ الْغَيْثَ مِنْۢ بَعْدِ مَا قَنَطُوْا وَيَنْشُرُ رَحْمَتَهٗ ؕ

(२८) तथा त्यही हो जो मानिसहरु निराश भईहाल्नुका पश्चात वर्षा गर्दछ[3] तथा आफ्नो

[1]अर्थात् उनको विनय सुन्दछ तथा उनको इच्छा एवं कामनाहरु पूरा गर्दछ किन्तु आवश्यक छ कि प्रार्थनाका प्रतिबन्ध तथा नियमहरुको पूरा पालना गरियोस् । हदीसहरुमा चर्चित छ कि अल्लाह आफ्ना भक्तहको तौबा (क्षमा-याचना) बाट त्यस व्यक्तिसित पनि अधिक प्रसन्न हुन्छ जसको सवारी खानपिनका सामान सहित वनमा हराउँछ तथा त्यो निराश भएर कुनै रुखमुनि सुत्छ कि सहसा त्यसले आफ्नो सवारी भेटोस् र हर्षोल्लासमा उसको मुखबाट निस्किहालोस् कि हे अल्लाह तिमी मेरो भक्त तथा तिम्रो प्रभु हूँ, अर्थात् अति आनन्दमा त्यसले गल्ती गरिहालोस् । (सहीह मुस्लिम किताबुत्तौबा बाबुन फिल हद्दे अलत् तौबा वल फर्हे बिहा)

[2]अर्थात् यदि अल्लाह प्रत्येक व्यक्तिलाई आवश्यकताभन्दा अधिक एक समान जीविकाका साधन प्रदान गरिदिन्छ भने त्यसको परिणाम यो हुन्छ कि कोही कसैको अधीनता स्वीकार गर्दैन । प्रत्येक व्यक्ति उपद्रव तथा नराम्रो अथवा अत्याचार सीमा उल्लंघनमा एकसे एक बढी भएको हुन्थ्यो तथा जगत उपद्रवले भरिन्थ्यो ।

[3]अर्थात् जो जीविकाको उपजमा सबभन्दा अधिक लाभदायक तथा महत्वपूर्ण छ । यो वर्षा जब निराशाका पश्चात हुन्छ त यस अनुग्रहको संवेदन पनि त्यसैबेला हुन्छ । अल्लाह तआलाद्वारा यस्तो गर्नुमा हिक्मत पनि यही छ कि भक्तहरु अल्लाहको प्रदानहरुको सम्मान गरुन् तथा त्यसको कृतज्ञता देखाऊन् ।

وَهُوَ الْوَلِيُّ الْحَمِيدُ ﴿٢٨﴾

कृपालाई विस्तार गरिदिन्छ । त्यही हो संरक्षक तथा प्रशंसा एवं महिमाका योग्य ।[1]

وَمِنْ آيَاتِهِ خَلْقُ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَثَّ فِيهِمَا مِن دَابَّةٍ ۚ وَهُوَ عَلَىٰ جَمْعِهِمْ إِذَا يَشَاءُ قَدِيرٌ ﴿٢٩﴾

(२९) तथा त्यसका निशानीहरुमध्ये आकाश तथा धर्तीको सृष्टि गर्नु र तिनमा जीउधारीहरुलाई फैलाउनु हो । त्यो यस कुरामा पनि सामर्थ्यवान छ कि जब चाहन्छ उनलाई एकत्रित गरिदिन्छ ।[2]

وَمَا أَصَابَكُم مِّن مُّصِيبَةٍ فَبِمَا كَسَبَتْ أَيْدِيكُمْ وَيَعْفُو عَن كَثِيرٍ ﴿٣٠﴾

(३०) तथा जे-जति पनि कष्ट तिमीलाई पुग्दछन् ती तिम्रा आफ्ना हातहरुका कर्तुतको (प्रतिफल) हो, तथा त्यसले धेरै कुराहरुलाई क्षमा गरिदिन्छ ।[3]

[1]कार्यक्षम छ, आफ्ना असल भक्तहरुका काम बनाउँछ । उनीहरुलाई लाभ पुऱ्याउँछ तथा नराम्रो एवं विनाशबाट उनको रक्षा गर्दछ । आफ्ना यस अपार तथा अनुग्रहहरुमा प्रशंसनीय छ ।

[2] دَآبَّةٍ (धर्तीमा हिंड्ने-डुल्नेवाला) को शब्द साधारण छ, जसमा जिन्न तथा मानिसका अतिरिक्त सबै जीव सम्मिलित छन् जसका रुप, रङ्ग, बोलीहरु, स्वभाव तथा प्रकार एवं जाति एक-अर्काभन्दा सर्वथा भिन्न छन् तथा उनी धर्तीमा फैलिएका छन् । यी सबैलाई अल्लाह तआला़ले प्रलयका दिन एउटै मैदानमा एकत्रित गर्नेछ ।

[3]यो सम्बोधन यदि ईमानवालाहरुसित छ भने अभिप्राय हुनेछ कि तिम्रा केही पापहरुका प्रायश्चित (क्षतिपूर्ति) त्यो आपदा बन्दिन्छ जो तिमीलाई पापहरुका बदला पुऱ्याउँछ तथा केही पाप त्यो हो जो अल्लाह यसै क्षमा गरिदिन्छ तथा अल्लाह बडो कृपाशील छ, क्षमा गर्नुका पश्चात आख़िरतमा त्यसमा पकड गर्नेछैन । हदीसमा पनि चर्चा छ कि ईमान भएकालाई जे-पनि दुख, चिन्ता तथा शोक पुग्दछ यहाँसम्मकि त्यसका पाउँमा काँडापनि बिझिन्छ त अल्लाह तआला़ त्यसका कारणले त्यसका पाप क्षमा गरिदिन्छ । (सहीह बुख़ारी, किताबुल मरज़ा, बाबु माजाअ फ़ी कफ्फ़ारतिल मरज़े, मुस्लिम किताबुल बिर्रे, बाबु सवाबिल मोमिने फीमा युसीबुहू मिन मरज़िन्) यदि सम्बोधन सामान्य हुन्छ भने अभिप्राय यो हुनेछ कि तिमीलाई जे दुख संसारमा पुग्छन्, यी तिम्रा आफ्ना पापहरुको परिणाम हो जबकि अल्लाह तआला़ धेरैजसो पापलाई क्षमा नै गरिदिन्छ, अर्थात या त सदाका लागि क्षमा गरिदिन्छ अथवा तिनमा तुरुन्त दण्ड दिंदैन । (दण्ड एवं सजायमा विलम्ब पनि एकप्रकारको क्षमा नै हो जस्तो अर्को स्थानमा भन्यो :

﴿وَلَوْ يُؤَاخِذُ اللَّهُ النَّاسَ بِمَا كَسَبُوا مَا تَرَكَ عَلَىٰ ظَهْرِهَا مِن دَابَّةٍ﴾

وَمَآ اَنْتُمْ بِمُعْجِزِيْنَ فِى الْاَرْضِ ۚ وَمَا لَكُمْ مِّنْ دُوْنِ اللّٰهِ مِنْ وَّلِيٍّ وَّلَا نَصِيْرٍ ﴿٣١﴾

(३१) तथा तिमी हामीलाई धर्तीमा विवश गर्नेवाला होइनौ,[1] तथा तिम्रा लागि अल्लाह (तआला) का अतिरिक्त कोही कार्यक्षम छैन तथा न सहायता गर्नेवाला ।

وَمِنْ اٰيٰتِهِ الْجَوَارِ فِى الْبَحْرِ كَالْاَعْلَامِ ﴿٣٢﴾

(३२) तथा समुद्रमा हिंड्ने पर्वतहरुजस्तै डुङ्गाहरु त्यसका निशानीहरुमध्ये हुन् ।[2]

اِنْ يَّشَاْ يُسْكِنِ الرِّيْحَ فَيَظْلَلْنَ رَوَاكِدَ عَلٰى ظَهْرِهٖ ۗ اِنَّ فِىْ ذٰلِكَ لَاٰيٰتٍ لِّكُلِّ صَبَّارٍ شَكُوْرٍ ﴿٣٣﴾

(३३) यदि त्यो चाहन्छ भने हावा बन्द गरिदिन्छ तथा यी डुङ्गाहरु समुद्रमा रोकिरहून् । निःसन्देह यसमा प्रत्येक धैर्य राख्ने कृतज्ञका लागि निशानीहरु छन् ।

اَوْ يُوْبِقْهُنَّ بِمَا كَسَبُوْا وَيَعْفُ عَنْ كَثِيْرٍ ﴿٣٤﴾

(३४) अथवा उनीहरुलाई उनका कर्तुतहरुका कारण नष्ट गरिदिन्छ ।[3] त्यो त धेरैजसो त्रुटिहरुलाई क्षमा गरिदिन्छ ।[4]

وَّيَعْلَمَ الَّذِيْنَ يُجَادِلُوْنَ فِىْٓ اٰيٰتِنَا ۗ

(३५) र ताकि जो मानिस हाम्रा निशानीहरुमा झगड्छन्[5] उनीहरुले ज्ञात गरिहालून् कि उनका लागि

यसै भावार्थको आयत सूरः अन्नहल-६१ पनि हो ।

[1]अर्थात् तिमी भागेर कुनै यस्तो ठाउँमा जान सक्दैनौ कि जहाँ तिमी हाम्रो पकडमा आउन नसक अथवा जुन विपदा हामी तिमीमाथि उतार्न चाहन्छौं त्यसबाट बच्नसक ।

[2]الجوار (अलजेवार) अथवा الجواري (अलजवारी) جَارِيَةٌ जारीयह (चल्नेवाला) को वहुवचन हो । अर्थ हो नौकाहरु, जहाज । यो अल्लाहका पूर्ण सामर्थ्यको प्रमाण हो कि सागरहरुमा पर्वतहरुका समान डुङ्गाहरु तथा जहाज त्यसको आज्ञाले चल्छन् । अन्यथा त्यसले आज्ञा दिन्छ भने उ सागरहरुमा उभिरहून् ।

[3]अर्थात् समुद्रलाई आज्ञा देओस् तथा त्यसका लहरहरुमा बाढी आओस् तथा यिनी त्यसमा डुबिहालून् ।

[4]अन्यथा समुद्रमा यात्रा गर्ने कोही सुरक्षित वापस आउन नसकोस् ।

[5]अर्थात् उनका इन्कार गर्दछन् ।

مَا لَهُمْ مِّنْ مَّحِيْصٍ ۝٣٥

कुनै छुट्कारा छैन ।[1]

فَمَآ أُوْتِيْتُم مِّن شَيْءٍ فَمَتَاعُ الْحَيٰوةِ الدُّنْيَا ۚ وَمَا عِنْدَ اللهِ خَيْرٌ وَّأَبْقٰى لِلَّذِيْنَ اٰمَنُوْا وَعَلٰى رَبِّهِمْ يَتَوَكَّلُوْنَ ۝٣٦

(३६) तसर्थ तिमीलाई जे-जति दिइएको छ त्यो सांसारिक जीवनको केही अलिकति साधन हो[2] तथा अल्लाह (तआला) का पासमा जो छ त्यो त्यसभन्दा कैयन् गुना श्रेष्ठ[3] तथा स्थाई छ, त्यो उनका लागि हो जसले ईमान स्वीकार गरे तथा केवल आफ्ना प्रभुमाथि नै भरोसा गर्दछन् ।

وَالَّذِيْنَ يَجْتَنِبُوْنَ كَبٰٓئِرَ الْإِثْمِ وَالْفَوَاحِشَ وَإِذَا مَا غَضِبُوْا هُمْ يَغْفِرُوْنَ ۝٣٧

(३७) तथा उनीहरु महापापहरुबाट र असभ्य कुराहरुबाट बच्दछन् तथा क्रोधका समय (पनि) क्षमा गरिदिन्छन् ।[4]

وَالَّذِيْنَ اسْتَجَابُوْا لِرَبِّهِمْ وَأَقَامُوا الصَّلٰوةَ ۖ وَأَمْرُهُمْ شُوْرٰى

(३८) तथा आफ्ना प्रभुका आदेशलाई स्वीकार गर्दछन्,[5] तथा नमाज़को नियमित रुपले स्थापना गर्दछन्[6] तथा उनको प्रत्येक काय

---

[1]अर्थात् अल्लाहका प्रकोपबाट उनीहरु कतै भागेर मुक्ति प्राप्त गर्न सक्दैनन् ।

[2]अर्थात् साधारण तथा हीन छ चाहे त्यो कारुणकै कोष नै किन नहोस् । यसकारण त्यसका धोखामा नआउनु, यसकारण कि यो सामयिक तथा नश्वर हो ।

[3]अर्थात् राम्रा कर्महरुको जो फल अल्लाहका पास प्राप्त हुनेछ त्यो संसारका सामानहरुभन्दा कैयन् अधिक उत्तम छ तथा स्थाई पनि, किनकि त्यसको अन्त्य एवं विनाश छैन । अभिप्राय यो हो कि लोकलाई परलोकमाथि प्रधानता नदेऊन्, यस्तो गर्दछौ भने पछुताउने छौ ।

[4]अर्थात् मानिसहरुलाई क्षमा गर्नु उनका स्वभावको एक अंश हो न कि बदला लिनु । जस्तो नबी सल्लल्लाहु अलैहि वसल्लमका विषयमा आउँछ :

«مَاانْتَقَمَ لِنَفْسِهِ قَطُّ إِلَّا أَنْ تُنْتَهَكَ حُرُمَاتُ اللهِ»

"नबी सल्लल्लाहु अलैहि वसल्लमले आफू स्वयंमका लागि कहिल्यै बदला लिनु भएन । हो अल्लाहका विधानहरु (निषेधाज्ञाहरु) लाई तोडिन्थ्यो भने उहाँका लागि असहनीय थियो ।" (बुख़ारी किताबुल अदब, बाबु यस्सेरु वला तुआस्सिरु र मुस्लिम किताबुल फज़ाएल)

[5]अर्थात् त्यसको आज्ञाको पालना त्यसका रसूलको अनुसरण तथा त्यसका धम्कीहरुबाट पन्छिन्छन् ।

[6]नमाज़को नियमितता र एकामतको विशेष गरी वर्णन गरिएको छ कि उपासना

بَيْنَهُمْ ۖ وَمِمَّا رَزَقْنَاهُمْ يُنفِقُونَ ﴿٣٨﴾

आपसी विचार-विमर्शले हुन्छ[1] तथा जे-जति हामीले उनलाई प्रदान गरेका छौं, त्यसमध्येबाट (हाम्रा नाममा) दिन्छन् ।

وَالَّذِينَ إِذَا أَصَابَهُمُ الْبَغْيُ

(३९) तथा जब उनीमाथि अत्याचार (एवं क्रुरता)

(इबादत) मा यसको सबभन्दा अधिक महत्व छ ।

१ شُـــورى यो ذكرى तथा بُشرى का समान مفاعلة बाट धातु हो । अर्थात् ईमान भएकाहरुले प्रत्येक महत्वपूर्ण कार्य परस्पर परामर्शले गर्दछन् । आफ्नै विचारलाई अन्तिम निर्णय ठान्दैनन् । स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लमलाई पनि अल्लाहले आदेश दिनुभयो कि मुसलमानहरुसित परामर्श गर (आले इमरान-१५९) अत: उहाँ सल्लल्लाहु अलैहि वसल्लम युद्धका विषयहरु तथा अन्य महत्वपूर्ण कुराहरुमा परामर्शको प्रयोजन गर्नुहुन्थ्यो, जसबाट मुसलमानहरुको पनि उत्साह बढ्थ्यो तथा विषयका सबै भाग स्पष्ट हुनजान्थे । आदरणीय उमर रज़ियल्लाहु अन्हु जब भालाको प्रहारबाट घायल भइहाले तथा जीवनको कुनै आशा शेष रहेन त शासनका विषयमा परामर्शका लागि छ : व्यक्ति नियुक्त गरे । उस्मान, अली, तलहा, ज़ुबैर, साद तथा अब्दुर्रहमान पुत्र औफ़ (रज़ियल्लाहु अन्हुम) । उनले परस्पर परामर्शका पश्चात आदरणीय उस्मान रज़ियल्लाहु अन्हुलाई शासनका लागि निर्वाचित गरे । केही मानिस परामर्शका यस प्रबन्ध एवं आदेशबाट राजतन्त्रको खण्डन तथा प्रजातन्त्रलाई सिद्ध गर्दछन्, हाँलाकि परामर्शको प्रबन्ध शाही शासनमा पनि हुन्छ । राजाको पनि सल्लाहकार समिति हुन्छ जसमा प्रत्येक महत्वपूर्ण काममा सोच-विचार हुन्छ । यसकारण यस आयतबाट राजतन्त्रको कदापि खण्डन हुँदैन । यसका अतिरिक्त प्रजातन्त्रलाई परामर्शको समानार्थ सम्झनु सर्वथा गलत हो । परामर्श प्रत्येक साना-ठूलाबाट हुन सक्दैन, न त्यसको आवश्यकता नै छ । परामर्शको अर्थ ती मानिसहरुसित विचार-विमर्श गर्नु हो जो मामिलाको सूक्ष्मता तथा आवश्यकलाई बुझ्दछन्, जसमा परामर्शको आवश्यकता हुन्छ । जस्तो भवन, सेतु आदि निर्माण गर्नु छ भने धागोवाला, दर्जी अथवा रिक्शाचालकसित होइन कुनै इन्जिनियरसित परामर्श लिइनेछ । कुनै रोगका विषयमा परामर्शको आवश्यकता हुन्छ भने चिकित्सक वैद्यको आवश्यकता हुनेछ, जबकि प्रजातन्त्रमा यसका विपरीत प्रत्येक वयस्कलाई परामर्शको पात्र मानिन्छ, चाहे त्यो कोरा मूर्ख, निर्बोध तथा राज्यका विषयमा सूक्ष्मतासित बिल्कुलै अनभिज्ञ होस् । अत: परामर्श शब्दसित प्रजातन्त्रको सिद्धि अधिकार जमाउन एवं धाँधलीका अतिरक्त केही होइन, तथा जुनप्रकार सोशलिज्मको साथ इस्लामी शब्द जोड्नाले सोशलिज्म मुसलमान हुनसक्दैन, यसैप्रकार प्रजातन्त्रमा इस्लामको टालो लगाइदिनाले पश्चिमी प्रजातन्त्रमा खिलाफतको वस्त्र सही आउनसक्दैन । पश्चिमको यो बृक्ष इस्लामको भूमिमा बिकसित हुनसक्दैन ।

هُمۡ يَنۡتَصِرُوۡنَ ۝٣٩

हुन्छ भने उनी केवल बदला लिइहाल्छन् ।[1]

وَجَزٰٓؤُا سَيِّئَةٍ سَيِّئَةٌ مِّثۡلُهَا ۚ فَمَنۡ عَفَا وَاَصۡلَحَ فَاَجۡرُهٗ عَلَى اللّٰهِ ؕ اِنَّهٗ لَا يُحِبُّ الظّٰلِمِيۡنَ ۝٤٠

(४०) तथा नराम्रोको बदला त्यसै जस्तो नराम्रो हो,[2] तथा जो क्षमा गरिदिन्छ र सुधार गर्छ त त्यसको प्रतिफल अल्लाहमाथि छ । वास्तवमा अल्लाह (तआला) अत्याचारीहरुसित प्रेम गर्दैन ।

وَلَمَنِ انۡتَصَرَ بَعۡدَ ظُلۡمِهٖ فَاُولٰٓئِكَ مَا عَلَيۡهِمۡ مِّنۡ سَبِيۡلٍ ۝٤١

(४१) तथा जो व्यक्ति आफू नृशंसित हुनुका पश्चात (समान) बदला लिइहाल्छ भने यस्ता व्यक्तिमाथि (निन्दाको) कुनै मार्ग छैन ।

اِنَّمَا السَّبِيۡلُ عَلَى الَّذِيۡنَ يَظۡلِمُوۡنَ النَّاسَ وَيَبۡغُوۡنَ فِى الۡاَرۡضِ بِغَيۡرِ الۡحَقِّ ؕ اُولٰٓئِكَ لَهُمۡ عَذَابٌ اَلِيۡمٌ ۝٤٢

(४२) यो मार्ग केवल ती मानिसहरुमा छ जो स्वयं अरुहरुमाथि अत्याचार गर्दछन् तथा धर्तीमा अनायास उपद्रव मच्चाउँदै हिंड्छन् । यी नै हुन् जसका लागि कष्टदायी यातनाहरु छन् ।

وَلَمَنۡ صَبَرَ وَغَفَرَ اِنَّ ذٰلِكَ لَمِنۡ عَزۡمِ الۡاُمُوۡرِ ۝٤٣

(४३) तथा जो व्यक्ति धैर्य गरिहाल्छ एवं क्षमा गरिदिन्छ, त नि:सन्देह यो एउटा ठूला साहसका कार्यहरुमध्ये (एउटा कार्य) हो ।

وَمَنۡ يُّضۡلِلِ اللّٰهُ فَمَا لَهٗ مِنۡ وَّلِيٍّ مِّنۡۢ بَعۡدِهٖ ؕ وَتَرَى الظّٰلِمِيۡنَ

(४४) तथा जसलाई अल्लाह (तआला) ले विचलित गरिदिन्छ त्यसका पश्चात कोही कार्यक्षम छैन ।

[1]अर्थात् बदला लिनबाट त्यो विवश छैन । यदि बदला लिन चाहन्छन् भने लिन सक्छन्, तैपनि सामर्थ्य हुँदाहुँदै उनी क्षमालाई प्रधानता दिन्छन् । जस्तै नबी सल्लल्लाहु अलैहि वसल्लमले मक्का विजयका दिन आफ्नो ज्यान लिन खोज्नेहरुका लागि सामान्य क्षमाको घोषणा गरिदिनु हो । हुदैबीयामा उहाँले अस्सी व्यक्तिहरुलाई क्षमा गरिदिनुभयो जसले उहाँका विरोधमा षड्यन्त्र रचेका थिए । लबीद बिन आसिम यहूदीसित बदला लिनु भएन जसले उहाँमाथि जादू गरेको थियो । त्यस यहूदी नारीलाई उहाँले केही पनि भन्नुभएन जसले उहाँका खानामा विष मिसाइदिएको थियो जसको पीडा उहाँले आजीवन अनुभव गर्नुभयो, सल्लल्लाहु अलैहि वसल्लम । (इब्ने कसीर)

[2]यो प्रतिकार (बदला) लिनुको अनुमति होइन । नराम्रोको बदला यद्यपि नराम्रो होइन किन्तु समरुप हुनका कारण नराम्रो नै भनिएको छ ।

لَمَّا رَاَوُا الْعَذَابَ يَقُوْلُوْنَ هَلْ اِلٰى مَرَدٍّ مِّنْ سَبِيْلٍ ۝

तथा तिमीले देख्नेछौ कि अत्याचारी मानिस यातनाहरुलाई देखेर भनिराखेका हुनेछन् कि के फर्कने कुनै मार्ग छ ?

وَتَرٰىهُمْ يُعْرَضُوْنَ عَلَيْهَا خٰشِعِيْنَ مِنَ الذُّلِّ يَنْظُرُوْنَ مِنْ طَرْفٍ خَفِيٍّ ۗ وَقَالَ الَّذِيْنَ اٰمَنُوْٓا اِنَّ الْخٰسِرِيْنَ الَّذِيْنَ خَسِرُوْٓا اَنْفُسَهُمْ وَاَهْلِيْهِمْ يَوْمَ الْقِيٰمَةِ ۗ اَلَآ اِنَّ الظّٰلِمِيْنَ فِيْ عَذَابٍ مُّقِيْمٍ ۝

(४५) तथा तिमीले देख्नेछौ कि उनी (नरकका) समक्ष ल्याइ उभ्याइनेछन्, अपमानका कारण झुक्दै गइराखेका हुनेछन् तथा छड्के हेरिराखेका हुनेछन् । ईमान भएकाहरुले स्पष्टरुपले भन्नेछन् कि वास्तवमा हानि बेहोर्ने उनीहरु हुन्, जसले आज केयामतका दिन स्वयं आफूलाई तथा आफ्ना परिवारलाई हानिमा पारिदिए । याद राख कि निःसन्देह अत्याचारीहरु स्थायी यातनामा छन् ।[1]

وَمَا كَانَ لَهُمْ مِّنْ اَوْلِيَآءَ يَنْصُرُوْنَهُمْ مِّنْ دُوْنِ اللّٰهِ ۗ وَمَنْ يُّضْلِلِ اللّٰهُ فَمَا لَهٗ مِنْ سَبِيْلٍ ۝

(४६) तथा उनको कोही सहायता गर्नेवाला छैन जो अल्लाह (तआला) बाट पृथक उनको सहायता गर्न सकोस्, तथा जसलाई अल्लाहले विचलित पारिदिन्छ त त्यसका लागि कुनै मार्ग नै छैन ।

اِسْتَجِيْبُوْا لِرَبِّكُمْ مِّنْ قَبْلِ اَنْ يَّاْتِيَ يَوْمٌ لَّا مَرَدَّ لَهٗ مِنَ اللّٰهِ ۗ مَا لَكُمْ مِّنْ مَّلْجَاٍ يَّوْمَئِذٍ

(४७) आफ्ना प्रभुको आदेश मानिहाल यसभन्दा पूर्व कि अल्लाहको तर्फबाट त्यो दिन आइपुगोस् जुन हटिजानु असम्भव छ ।[2] तिमीलाई त्यस दिन न त कुनै शरणको स्थान पाइनेछ तथा

[1]अर्थात् संसारमा यी काफ़िर हामीलाई मूर्ख तथा सांसारिक क्षतिमा ग्रस्त ठान्दथे, जबकि संसारमा हामी केवल परलोकलाई प्रधानता दिन्थ्यौं तथा सांसारिक क्षतिलाई कुनै महत्व दिँदैनथ्यौं । आज देखिहाल वास्तविक क्षतिग्रस्त को छ । उनीहरु जसले सांसारिक क्षणिक क्षतिलाई अन्देखि गरेका थिए तथा आज उनी स्वर्गको आनन्द लिइराखेका छन्, अथवा उनी जसले संसारलाई नै सबैथोक सम्झेका थिए तथा आज यस्तो यातनामा ग्रस्त छन्, जसबाट अब मुक्ति नै सम्भव छैन ।

[2]अर्थात् जसलाई समाप्त गर्नु तथा हटाउनुको कुनै शक्ति राख्ने छैन ।

وَمَا لَكُم مِّن نَّكِيرٍ ۝

न लुकेर अन्जान बनिजानुको ।[१]

فَإِنْ أَعْرَضُوا فَمَا أَرْسَلْنَاكَ عَلَيْهِمْ حَفِيظًا ۖ إِنْ عَلَيْكَ إِلَّا الْبَلَاغُ ۗ وَإِنَّا إِذَا أَذَقْنَا الْإِنسَانَ مِنَّا رَحْمَةً فَرِحَ بِهَا ۖ وَإِن تُصِبْهُمْ سَيِّئَةٌ بِمَا قَدَّمَتْ أَيْدِيهِمْ فَإِنَّ الْإِنسَانَ

(४८) यदि यिनीहरु विमुख हुनजान्छन् त हामीले तपाईलाई उनीमाथि रक्षक बनाएर पठाएका छैनौं । तपाईंको दायित्व त केवल सन्देश पुऱ्याइदिनु हो[२] तथा जब हामी मनुष्यलाई आफ्नो दयाको स्वाद चखाउँछौं,[३] त त्यो त्यसमाथि घमण्ड गर्नथाल्छ,[४] तथा यदि उनीहरुलाई उनका कर्महरुका

---

[१]अर्थात् तिम्रा लागि कुनै यस्तो स्थान हुनेछैन कि जसमा तिमी लुकेर अन्जान बनिहाल तथा पहिचानमा नआउ अथवा देखिन नसक, जस्तो भन्यो:

﴿يَقُولُ الْإِنسَانُ يَوْمَئِذٍ أَيْنَ الْمَفَرُّ ۝ كَلَّا لَا وَزَرَ ۝ إِلَىٰ رَبِّكَ يَوْمَئِذٍ الْمُسْتَقَرُّ﴾

"त्यस दिन मानिसले भन्नेछ कि कहाँ भाग्नुको ठाउँ छ । कदापि छैन, कुनै भाग्नुको मार्ग छैन । त्यसदिन तिम्रा प्रभुका पास नै ठेकाना (शरण) हुनेछ ।" (अल-कियामह-१०-१२)

अथवा नकीर, नकारको अर्थमा छ कि तिमी आफ्ना पापहरुलाई नकार्न सक्ने छैनौ, किनकि एक त त्यो सब अंकित हुनेछन् । दोस्रो, स्वयं मानिसका अङ्गले पनि साक्ष्य दिनेछन् । अथवा जुन दण्ड तिमीलाई तिम्रा पापहरुका कारण दिइनेछ तिमी त्यस दण्डको इन्कार गर्न सक्ने छैनौ, किनकि पापहरुलाई स्वीकार नगरी तिमीलाई कुनै चारा (उपाय) हुनेछैन ।

[२]जस्तै अन्य स्थानमा भन्यो ﴿لَّيْسَ عَلَيْكَ هُدَاهُمْ وَلَٰكِنَّ اللَّهَ يَهْدِي مَن يَشَاءُ﴾ (अल-बक़र-२७२) ﴿فَإِنَّمَا عَلَيْكَ الْبَلَاغُ وَعَلَيْنَا الْحِسَابُ﴾ (अर्रअद-४०) तथा ﴿فَذَكِّرْ إِنَّمَا أَنتَ مُذَكِّرٌ ۝ لَّسْتَ عَلَيْهِم بِمُصَيْطِرٍ﴾ (अल-गाशिया-२१,२२) यी सबैको भावार्थ यो हो कि तपाईंको दायित्व केवल तथा केवल यो हो कि अल्लाहका सन्देश मानिसहरुसम्म पुऱ्याइदिनुस्, मान्छन् अथवा मान्दैनन्, तपाईंसित त्यसको सोधपूछ हुनेछैन, किनकि मार्ग दर्शाइदिनु (हेदाय दिनु) तपाईंको अधिकारमै छैन, यो मात्र अल्लाहकै अधिकारमा छ ।

[३]अर्थात् जीविकाका साधनहरुको बाहुल्य, स्वास्थ्य एवं सुख, सन्तानको अधिकता, मान एवं पद आदि ।

[४]अर्थात् घमण्ड तथा अहंकार देखाउँछ, अन्यथा अल्लाहका वरदानहरुमाथि प्रसन्न हुनु अथवा त्यसको प्रदर्शन अप्रिय होइन । किन्तु ती वरदानहरुलाई प्रत्यक्ष गर्न तथा कृतज्ञताका रुपमा होस् । अहङ्कार एवं दिखावा तथा घमण्ड स्वरुप नहोस् ।

كَفُوْرٌ ﴿٤٨﴾

कारण कुनै कठिनाई आउँछ[1] त निश्चय मनुष्य बडो कृतघ्न छ।[2]

لِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَ الْاَرْضِ ؕ يَخْلُقُ مَا يَشَآءُ ؕ يَهَبُ لِمَنْ يَّشَآءُ اِنَاثًا وَّ يَهَبُ لِمَنْ يَّشَآءُ الذُّكُوْرَ ﴿٤٩﴾

(४९)आकाशहरु तथा धर्तीको राज्य अल्लाह (तआ़ला) कै लागि छ। त्यसले जे चाहन्छ पैदा गर्दछ,[3] जसलाई चाहन्छ पुत्रीहरु दिन्छ तथा जसलाई चाहन्छ पुत्र दिन्छ।

اَوْ يُزَوِّجُهُمْ ذُكْرَانًا وَّ اِنَاثًا ۚ وَ يَجْعَلُ مَنْ يَّشَآءُ عَقِيْمًا ؕ اِنَّهٗ عَلِيْمٌ قَدِيْرٌ ﴿٥٠﴾

(५०) अथवा उनीहरुलाई एकत्रित गरिदिन्छ[4] पुत्र पनि तथा पुत्रीहरु पनि, तथा जसले चाहन्छ बाँझो गरिदिन्छ, त्यो बडो ज्ञानवाला तथा सर्वशक्तिमान छ।

---

[1]धनको कमी, रोग, सन्तानबाट बञ्चित हुनु आदि।

[2]अर्थात् तुरुन्त अनुकम्पाहरुलाई बिर्सिदिन्छ तथा مُنْعِمْ (उपकारी) लाई पनि। यो अधिकांश मानिसका हिसाबले जसमा क्षीण ईमानका मानिस पनि सम्मिलित छन्। किन्तु अल्लाहका पुनीत भक्त तथा पूर्ण ईमान भएकाहरुको यो दशा हुँदैन। उनी दुखहरुलाई सहन गर्दछन् तथ अनुकम्पाहरुमाथि कृतज्ञता जस्तो कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो :

«إِنْ أَصَابَتْهُ سَرَّاءُ شَكَرَ فَكَانَ خَيراً لَهُ، وإِنْ أَصَابَتْهُ ضَرَّاءُ صَبَرَ فَكَانَ خَيراً لَهُ، وَلَيْسَ ذٰلِكَ لأَحَدٍ إِلَّا لِلْمُؤْمِنِ»

“यदि उनीहरुलाई कुनै खुशी पार्ने कुरो हुन्छ त उनीहरु आभार प्रकट गर्छन् त यो उनीहरुको लागि राम्रो हो र यदि दुखको कुरा पुग्छ त सहनशील हुन्छन् त यो पनि उनीहरुको लागि राम्रो हो यी कुरा मोमिनहरु बाहेक अरुहरुका लागि हुँदैनन।” (सहीह मुस्लिम, किताबुज्जुहद, बाबुल मोमिने अमरुहू खैरुन कुल्लुहू)

[3]अर्थात् विश्व (सृष्टि) मा केवल अल्लाहकै इच्छा तथा योजना चल्छ। त्यो जे चाहन्छ हुन्छ, जे चाहँदैन हुँदैन। कोही अर्को त्यसमा हस्तक्षेपको सामर्थ्य तथा अधिकार राख्दैन।

[4]अर्थात् जसलाई चाहन्छ पुत्र-पुत्री दुवै दिन्छ। यस स्थानमा अल्लाहले मानिसहरुको चार श्रेणी वर्णन गरेको छ। एक त्यो जसलाई केवल पुत्र दिन्छ, दोस्रो त्यो जसलाई केवल पुत्रीहरु दिन्छ, तेस्रो त्यो जसलाई पुत्र-पुत्रीहरु दुवै प्रदान गर्दछ तथा चौथो त्यो जसलाई न पुत्र न पुत्री। मानिसहरुमा यो अन्तर तथा भेद अल्लाहका सामर्थ्यका लक्षणहरुमध्ये हो। यस ईश्वरीय अन्तरलाई संसारको कुनै शक्ति परिवर्तन गर्न सक्दैन। यो विभाजन सन्तानका हिसाबले हो। पिताका हिसाबले पनि मानिसहरुका चार प्रकार छन्। आदम अलैहिस्सलामलाई केवल माटोले रच्यो, उनका न पिता छन्, न माता २-हव्वालाई आदम अर्थात् पुरुषबाट पैदा गऱ्यो, उनकि माता छैनन्, (३) आदरणीय ईसालाई केवल स्त्रीबाट पैदा गऱ्यो, उनका पिता छैनन, (४) तथा शेष सबै मानिसहरुलाई नर-नारी दुवैको मिलनबाट, उनका पिता पनि छन् तथा माता पनि। فسبحان الله العليم القدير (इब्ने कसीर)

وَمَا كَانَ لِبَشَرٍ اَنْ يُّكَلِّمَهُ اللّٰهُ اِلَّا وَحْيًا اَوْ مِنْ وَّرَآئِ حِجَابٍ اَوْ يُرْسِلَ رَسُوْلًا فَيُوْحِيَ بِاِذْنِهٖ مَا يَشَآءُ ؕ اِنَّهٗ عَلِيٌّ حَكِيْمٌ ﴿٥١﴾

(५१) तथा असम्भव छ कि कुनै भक्तसित अल्लाह (तआ़ला) वार्तालाप गरोस् परन्तु प्रकाशनाका रुपमा अथवा पर्दाका पछाडीबाट अथवा कुनै फरिश्तालाई पठाओस् तथा त्यसले अल्लाहका आदेशले जो त्यो चाहन्छ प्रकाशना गरोस्।[1] निःसन्देह त्यो सर्वोच्च तथा तत्वदर्शी छ।

وَكَذٰلِكَ اَوْحَيْنَآ اِلَيْكَ رُوْحًا مِّنْ اَمْرِنَا ؕ مَا كُنْتَ تَدْرِيْ مَا الْكِتٰبُ وَلَا الْاِيْمَانُ وَلٰكِنْ جَعَلْنٰهُ نُوْرًا نَّهْدِيْ بِهٖ مَنْ نَّشَآءُ مِنْ عِبَادِنَا ؕ وَاِنَّكَ لَتَهْدِيْۤ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ۙ﴿٥٢﴾

(५२) तथा यसैप्रकार हामीले तपाईंतिर आफ्ना आदेशले रुह (आत्मा) लाई अवतरित गरेका छौं,[2] तपाईं त्यसभन्दा पूर्व यो पनि जान्नुहुन्थ्यो कि किताब तथा ईमान के वस्तु हो?[3] परन्तु हामीले त्यसलाई ज्योति बनायौं, त्यसद्वारा आफ्ना भक्तहरुमध्ये जसलाई चाहन्छौं मार्गदर्शन दिन्छौं।[4] निःसन्देह

---

[1] यस आयतमा ईश्वरीय प्रकाशनाका तीन रुप बताइएका छन्। प्रथम यो कि हृदयमा कुनै कुरा पारिदिनु अथवा स्वप्नमा भनिदिनु यस विश्वासका साथ कि यो अल्लाहकै तर्फबाट हो। दोस्रो पर्दाका पछाडीबाट कुरा गर्नु जस्तै ईशदूत मूसासित त तूर पर्वतमा गरियो, फरिश्ताहरुद्वारा आफ्नो प्रकाशना पठाउनु। जस्तै देवदूत जिब्रील अलैहिस्सलाम अल्लाहको आदेश लिएर आउँथे तथा पैग़म्बरहरुलाई सुनाउँथे।

[2] رُوْح सित अभिप्राय ईशवाणी पवित्र कुर्आन हो। अर्थात् जस्तो तपाईंभन्दा पहिला अन्य रसूलहरुमाथि हामीले प्रकाशना (वह्य) गरिरहयौं, त्यस्तै हामीले तपाईंमाथि कुर्आनको प्रकाशना गरेका छौं। पवित्र कुर्आनलाई रुह (आत्मा) भनिएको छ कि कुर्आनबाट हृदयहरुलाई जीवन प्राप्त हुन्छ जस्तै आत्मामा मानव जीवनको भेद लुप्त छ।

[3] किताबसित तात्पर्य कुर्आन हो। अर्थात् नबुअतभन्दा पहिला कुर्आनको पनि ज्ञान तपाईंलाई थिएन। यस्तो नै ईमानका ती विवरणबाट पनि अन्जान हुनुहुन्थ्यो जो धर्मविधान (शरीयत) मा अभीष्ट छ।

[4] अर्थात् कुर्आनलाई प्रकाश बनायो, त्यसद्वारा हामी आफ्ना भक्तहरुमध्ये जसलाई चाहन्छौं सन्मार्गबाट सम्मानित गर्छौं। अभिप्राय यो हो कि कुर्आनबाट मार्गदर्शन तथा निर्देशन तिनैलाई प्राप्त हुन्छ जसमा ईमानको इच्छा तथा तडप हुन्छ उनी त्यसलाई मार्गदर्शन प्राप्त गर्नका लागि पढ्छन्-सुन्छन् तथा चिन्तन-मनन गर्दछन्, त अल्लाह उनको सहायता गर्दछ तथा उनका लागि सन्मार्गको पथ समतल गर्दछ। जसमाथि उनी हिंडिहाल्छन्।

तपाईं सत्यमार्गको दर्शन गराइराख्नु भएको छ ।

صِرَاطِ اللّٰهِ الَّذِي لَهُ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ؕ اَلَآ اِلَى اللّٰهِ تَصِيْرُ الْاُمُوْرُ ﴿٥٣﴾

(५३) त्यस अल्लाहका मार्गको[1] जसका स्वामित्वमा आकाशहरु एवं धर्तीको हरेक वस्तु छ । सावधान रह, सबै कार्य अल्लाहतिरै फर्कन्छन् ।[2]

## सूरतुज़ ज़ुख़रुफ़-४३

سُوْرَةُ الزُّخْرُفِ

सूरः ज़ुख़रुफ़ मक्कामा अवतरित भएको तथा यसमा उनानब्बे (८९) आयतहरु तथा सात रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

حٰمٓ ﴿١﴾

(१) हा. मीम. ।

وَالْكِتٰبِ الْمُبِيْنِ ﴿٢﴾

(२) सौगन्ध छ यस खुला किताबको ।

اِنَّا جَعَلْنٰهُ قُرْءٰنًا عَرَبِيًّا لَّعَلَّكُمْ

(३) हामीले यसलाई अरबी भाषाको कुरआन

---

अन्यथा जो आफ्ना आँखा बन्द गर्दछन्, कानहरुमा कपास हाल्दछन् तथा बोध एवं विवेकले काम लिंदैनन् त उनीहरुलाई मार्गदर्शन कसरी प्राप्त हुनसक्दछ । जस्तै भन्नुभयो :

﴿قُلْ هُوَ لِلَّذِيْنَ اٰمَنُوْا هُدًى وَّشِفَآءٌ ؕ وَالَّذِيْنَ لَا يُؤْمِنُوْنَ فِيْٓ اٰذَانِهِمْ وَقْرٌ وَّهُوَ عَلَيْهِمْ عَمًى ؕ اُولٰٓئِكَ يُنَادَوْنَ مِنْ مَّكَانٍۢ بَعِيْدٍ﴾

"तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) भनिदिनुस् कि यो त ईमानवालाहरुका लागि मार्गदर्शन एवं स्वास्थ्य सुधार हो तथा जो ईमान स्वीकार गर्दैनन् उनका कानहरुमा त (बहिरापन एवं) भार छ तथा उनलाई अन्धापन छ यिनीहरु टाढाका स्थानबाट पुकारिंदैछन् ।" (सूरः हा.मीम.अस्सजदा:-४४)

[1]यो صراط مستقيم (सिराते मुस्तक़ीम) सोझो मार्ग इस्लाम हो । त्यसलाई अल्लाहले आफूतिर सम्बन्धित गरेको छ जसबाट त्यस मार्गको महानता तथा प्रतिष्ठा स्पष्ट हुन्छ तथा त्यसका एक मात्र मोक्ष माग हुने कुरोतिर संकेत पनि छ ।

[2]अर्थात् केयामतका दिन सबै निर्णय अल्लाहकै हातमा हुनेछ यसमा कडा चेतावनी छ जो प्रतिकारलाई आवश्यक बनाउंछ ।

تَعْقِلُوْنَ ۝٣

बनाएको छ[1] ताकि तिमी बुझ्न सक ।

وَاِنَّهٗ فِيْٓ اُمِّ الْكِتٰبِ لَدَيْنَا لَعَلِيٌّ حَكِيْمٌ ۝٤

(४) तथा नि:सन्देह यो सुरक्षित पुस्तकमा छ तथा हाम्रा निकट उच्च कोटिको हिक्मतले पूर्ण छ ।[2]

اَفَنَضْرِبُ عَنْكُمُ الذِّكْرَ صَفْحًا اَنْ كُنْتُمْ قَوْمًا مُّسْرِفِيْنَ ۝٥

(५) के हामीले यस सदुपदेशलाई तिमीबाट यस आधारमा हटाइहालौं कि तिमी सीमा उल्लंघन गर्नेवाला हौ ।[3]

وَكَمْ اَرْسَلْنَا مِنْ نَّبِيٍّ فِي الْاَوَّلِيْنَ ۝٦

(६) तथा हामीले विगत जातिहरुमा पनि धेरै नबी पठायौं ।

وَمَا يَاْتِيْهِمْ مِّنْ نَّبِيٍّ اِلَّا كَانُوْا بِهٖ

(७) तथा जो नबी उनका पासमा आयो उनीहरुले

---

[1]जो संसारको सर्वोत्तम भाषा हो । दोस्रो, यसबाट सर्वप्रथम सम्वन्धित पनि अरब थिए । उनैको भाषामा कुर्आन उतार्‍यो ताकि उनी बुझ्न चाहन्छन् भने सरलताले बुझिहालून् ।

[2]यसमा कुर्आनको त्यस महानता तथा प्रधानताको वर्णन छ जो उच्च लोकमा त्यसलाई प्राप्त छ, ताकि जगत्‌वासी पनि त्यसको महानता तथा मर्यादालाई ध्यानमा राख्दै त्यसलाई तदानुसार महत्व देऊन् तथा त्यसबाट मार्गदर्शनको त्यो उद्देश्य प्राप्त गरुन् जसका लागि त्यसलाई संसारमा उतारिएको छ । أم الكِتاب (मूलग्रन्थ) सित अभिप्राय लौहे महफूज (सुरक्षित पट्टिका) हो ।

[3]यसका विभिन्न अर्थ गरिएका छन् जस्तै (१)-तिमी किनकि पापहरुमा अधिक लीन त्यसमाथि अडिग छौ । यसकारण के तिमी यो सोच्दछौ कि हामीले तिमीलाई शिक्षा उपदेश दिन छाडिदिनेछौं अथवा त्यागदिनेछौं ? (२)-अथवा तिम्रा कुफ्र तथा अतिमाथि हामीले तिमीलाई केही भन्ने छैनौं तथा तिमीलाई क्षमा गरिदिनेछौं । (३)-अथवा हामी तिमीलाई विनाश गरिदेऔं तथा तिमीलाई कुनै कुराको आदेश देऔं रोक्न नसकौं । (४)-यसकारण कि तिमी पवित्र कुर्आन प्रति विश्वास गर्नेवाला होइनौ । अत: हामीले कुर्आनका उतार्ने क्रम नै रोकिदेऔं । पहिला भावार्थलाई इमाम तबरीले तथा अन्तिमलाई इमाम इब्ने कसीरले अधिक रुचाउनु भएछ तथा भनेका छन् कि यो अल्लाहको दया तथा करुणा हो कि उसले भलाई तथा कुर्आनतिर आमन्त्रण दिनुको क्रमस्थगित गरेन, यद्यपि त्यो मुख फर्काउने तथा इन्कार गर्नमा सीमा उल्लंघन गरिराखेका थिए, ताकि जसका भाग्यमा सन्मार्ग छ, त्यो यसद्वारा सोझो बाटो अप्नाइहालोस् तथा जो हत्‌भागी छ उनीमाथि प्रमाण स्थापित हुनजाओस् ।

يَسْتَهْزِءُوْنَ ⑦

त्यसको उपहास गरे ।

فَاَهْلَكْنَآ اَشَدَّ مِنْهُمْ بَطْشًا وَّمَضٰى مَثَلُ الْاَوَّلِيْنَ ⑧

(८) त हामीले उनीभन्दा अधिक बलवानहरुलाई[१] नष्ट गरिहाल्यौं तथा अघिल्लाहरुको उदाहरण गुज्रिसकेको छ ।[२]

وَلَئِنْ سَاَلْتَهُمْ مَّنْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ لَيَقُوْلُنَّ خَلَقَهُنَّ الْعَزِيْزُ الْعَلِيْمُ ⑨

(९) तथा यदि तपाईं उनीसित सोध्नुहुन्छ कि आकाशहरु तथा धर्तीलाई कसले पैदा गऱ्यो त निःसन्देह उनको उत्तर हुनेछ कि उनीहरुलाई सर्वशक्तिमान एवं सर्वज्ञाता (अल्लाहले नै) पैदा गरेको छ ।[३]

الَّذِيْ جَعَلَ لَكُمُ الْاَرْضَ مَهْدًا وَّجَعَلَ لَكُمْ فِيْهَا سُبُلًا لَّعَلَّكُمْ تَهْتَدُوْنَ ⑩

(१०) (त्यही हो) जसले तिम्रा लागि धर्तीलाई फर्श (अथवा ओछ्यान) बनायो[४] तथा त्यसमा तिम्रा लागि मार्ग बनाइदियो ताकि तिमी मार्ग पाइहाल्ने गर ।[५]

---

[१]अर्थात् मक्कावासीहरुभन्दा अधिक बलवान थिए । जस्तो अर्को स्थानमा भन्नुभयो:

﴿ كَانُوْٓا اَكْثَرَ مِنْهُمْ وَاَشَدَّ قُوَّةً ﴾

"उनी संख्या तथा बलमा उनीभन्दा कैयौं अधिक थिए ।" (अल-मोमिन-८२)

[२]अर्थात् पवित्र कुर्आनमा ती जातिहरुको चर्चा अथवा विशेषता अनेक पटक गुज्रिसकेको छ । यसमा मक्कावासीहरुका लागि धम्की छ कि पछिल्ला जातिहरु रसूलहरुलाई झुठ्लाउनुका कारण नाश भए । यदि यिनी पनि नबी (दूतत्व) लाई झुठ्लाउनमा अडिग रहे भने उनैको जस्तो यिनी पनि नष्ट गरिदिइनेछन् ।

[३]किन्तु यस स्वीकारका उपरान्त यिनै सृष्टिहरुमध्ये धेरैलाई यी मूर्खहरुले अल्लाहको साझेदार बनाइहालेका छन् । यसबाट उनका अपराधको कुकृतको पनि वर्णन तथा उनका अज्ञानता एवं मुर्खताको प्रदर्शन पनि ।

[४]यस्तो विस्तर (ओछ्यान) जसमा स्थिरता तथा स्थायित्व होस् । तिमी यसमाथि हिंड्छौ, उभिन्छौ तथा सुत्छौ, जहाँ चाहन्छौ हिंड्डुल गर्छौ, उसले त्यसलाई पहाडहरुद्वारा स्थिर गरिदियो ताकि त्यसमा गति तथा कम्पन नहोस् ।

[५]अर्थात् एक क्षेत्रबाट अर्को क्षेत्रमा तथा एक देशबाट अर्को देशमा जानका लागि मार्ग बनाइदियो ताकि व्यवसायिक, व्यापारिक एवं अन्य उद्देश्यका लागि तिमी यातायात गर्नसक ।

وَالَّذِي نَزَّلَ مِنَ السَّمَاءِ مَاءً بِقَدَرٍ فَأَنشَرْنَا بِهِ بَلْدَةً مَّيْتًا كَذَٰلِكَ تُخْرَجُونَ ⑪

(११) तथा उसैले आकाशबाट एक अनुमान[1] का अनुसार वर्षा गऱ्यो, त हामीले त्यसबाट मृत नगरलाई जीवित गरिदियौं। त्यसैप्रकार तिमी निकालिनेछौ ।[2]

وَالَّذِي خَلَقَ الْأَزْوَاجَ كُلَّهَا وَجَعَلَ لَكُم مِّنَ الْفُلْكِ وَالْأَنْعَامِ مَا تَرْكَبُونَ ⑫

(१२) तथा जसले समस्त वस्तुहरुका जोडी[3] बनायो तथा तिम्रो (सवारीका) लागि डुङ्गाहरु बनायो तथा चौपाया पशु पैदा गऱ्यो जसमाथि तिमी सवार हुन्छौ ।

لِتَسْتَوُوا عَلَىٰ ظُهُورِهِ ثُمَّ تَذْكُرُوا نِعْمَةَ رَبِّكُمْ إِذَا اسْتَوَيْتُمْ عَلَيْهِ وَتَقُولُوا سُبْحَانَ الَّذِي سَخَّرَ لَنَا هَٰذَا وَمَا كُنَّا لَهُ مُقْرِنِينَ ⑬

(१३) ताकि तिमी उनको पिठ्यूँमा जमेर सवार हुँदैगर,[4] अनि आफ्ना प्रभुका (प्रदान गरिएका) उपहारहरुलाई याद गर जब त्यसमा ठीक-ठाक बसिहाल तथा भन कि पवित्र अस्तित्व छ उसको जसले त्यसलाई हाम्रा वशमा गरिदियो, यद्यपि हामीलाई त्यसलाई वशमा गर्नुको शक्ति थिएन ।[5]

[1]जसबाट तिम्रो आवश्यकता पूरा हुनसकोस्, किनकि आवश्यकताभन्दा कम भएको भए त तिम्रा लाभकारी हुने थिएन तथा अधिक भएको भए त त्यो तूफान बन्थ्यो जसमा तिमी डुब्नु एवं नष्ट हुनुको भय हुन्थ्यो ।

[2]अर्थात् जस्तो वर्षाबाट मृत धर्ती हरियो हुनजान्छ यस्तै केयामत (प्रलय) का दिन तिमीलाई पनि जीवित गरी कब्रहरुबाट निकालिनेछ ।

[3]प्रत्येक वस्तुको जोडी बनायो, भालेपोथी, वनस्पति-खेतीहरु, फलफूल तथा प्राणी सबैमा भालेपोथीको क्रम छ। केही ज्ञाताहरुले भन्छन् कि यसबाट अभिप्राय एक-अर्काका प्रतिकूल वस्तुहरु हुन्, जस्तै प्रकाश तथा अन्धकार, रोग तथा स्वास्थ्य, न्याय तथा अत्याचार, भलाई तथा नराम्रो कुरो, ईमान (विश्वास) तथा कुफ्र (इन्कार) नम्रता एवं कठोरता इत्यादि । केही ज्ञाताहरु भन्दछन् कि जोडी, प्रकारका अर्थमा छ अर्थात् सबै प्रकारको रचयिताहरु अल्लाह हो ।

[4] لِتَسْتَوُوا को अर्थ हो لِتَستَقِرّوا अथवा لِتَستَعْلُوا टेकेर बसिहाल अथवा चढिहाल । ظُهوره सर्वनाम एक वचन जातिवाचक संज्ञाका कारण छ ।

[5]अर्थात् यदि यी पशुहरुलाई हाम्रा अधीन तथा वशमा नगरेको भए त हामी यिनीहरुलाई आफ्ना वशमा राखेर उनलाई सवारी भारवाहन

وَإِنَّآ إِلَىٰ رَبِّنَا لَمُنقَلِبُونَ ﴿١٤﴾

(१४) तथा निश्चित रुपमा हामी आफ्नो प्रभुतिर फर्केर जानेछौं ।[1]

وَجَعَلُوا۟ لَهُۥ مِنْ عِبَادِهِۦ جُزْءًا ۚ إِنَّ ٱلْإِنسَٰنَ لَكَفُورٌ مُّبِينٌ ﴿١٥﴾

(१५) तथा उनीहरुले अल्लाहका केही भक्तहरुलाई त्यसको अंश बनाइदियो,[2] निःसन्देह मनुष्य स्पष्टरुपले कृतघ्न छ ।

أَمِ ٱتَّخَذَ مِمَّا يَخْلُقُ بَنَاتٍ وَأَصْفَىٰكُم بِٱلْبَنِينَ ﴿١٦﴾

(१६) के अल्लाह (तआला) ले आफ्नो सृष्टिमध्ये पुत्रीहरुलाई त स्वयं राखिहाल्यो तथा तिमीलाई पुत्रहरुबाट सुशोभित गऱ्यो ?

وَإِذَا بُشِّرَ أَحَدُهُم بِمَا ضَرَبَ لِلرَّحْمَٰنِ مَثَلًا ظَلَّ وَجْهُهُۥ مُسْوَدًّا وَهُوَ كَظِيمٌ ﴿١٧﴾

(१७) (यद्यपि) उनीहरुमध्ये कसैलाई जब त्यस वस्तुको सूचना दिइन्छ जसको उदाहरण उसले अल्लाह दयालुका लागि वर्णन गरेको छ, त त्यसको मुख कालो भइहाल्छ तथा त्यो शोकग्रस्त हुन्छ ।

---

तथा अन्य लक्ष्यका लागि प्रयोग गर्न सक्दैनथे । مُطِيقِين को अर्थ مُقرِنين हो ।

[1]नबी सल्लल्लाहु अलैहि वसल्लम जब सवारीमा सवार हुनुहुन्थ्यो तीन पटक त الله أكبر (अल्लाहु अकबर) भन्नुहुन्थ्यो तथा سبحان الذي देखि لَمُنقلبون सम्म आयत पढ्नु हुन्थ्यो । यसका अतिरिक्त भलाई तथा कुशलताका लागि प्रार्थना गर्नुहुन्थ्यो । (जुन दुआहरु (प्रार्थना) का पुस्तकमा हेरिहालियोस् ।) (सहीह मुस्लिम किताबुल हज्ज, बाबु मायाकूलु इज़ा रकिब..........)

[2]عِبَادْ बाट तात्पर्य फरिश्ता तथा جُزْءْ जुज़ (अंश) सित अभिप्राय पुत्रीहरु अर्थात् फरिश्ता हुन् जसलाई मूर्तिपूजकहरुले अल्लाहका पुत्रीहरु बनाएर उनको पूजा आरम्भ गरेका थिए । यसप्रकार उनी अल्लाहद्वारा पैदा गरिएकालाई त्यसका साझीदार तथा अंश मान्दथे जबकि उहाँ यी कुराहरुबाट परम पवित्र हुनुहुन्छ । केही ज्ञाताहरुले अंशसित अभिप्राय यहाँ भोग-प्रसादका रुपमा निकालिने ती पशु तात्पर्य लिएका छन् जसको एक भाग (अंश) मूर्तिपूजक अल्लाहका नाममा तथा एक भाग मूर्तिहरुका नाममा निकाल्ने गर्दथे । जसको चर्चा सूरतुल अन्आम १३६ मा छ ।

[3]यसमा उनको त्यस मूर्खता तथा बुद्धिहीनताको वर्णन छ जुन उनले अल्लाहका लागि सन्तान बनाएका छन् जसलाई उनी अप्रिय ठान्दछन् । हाँलाकि अल्लाहको सन्तान भएको भए त के यस्तै हुन्थ्यो कि त्यसकि दुई पुत्री हुन्थे तथा तिमीलाई पुत्रसित सम्मानित गर्ने थियो ।

أَوَمَن يُنَشَّؤُا۟ فِى ٱلْحِلْيَةِ وَهُوَ فِى ٱلْخِصَامِ غَيْرُ مُبِينٍ ⑱

(१८) अथवा के (अल्लाहका सन्तान पुत्रीहरु हुन्) जो आभूषणहरुमा पालियून् तथा झगडाहरुमा (आफ्ना कुरा) स्पष्ट गर्न नसकून् ?[1]

وَجَعَلُوا۟ ٱلْمَلَٰٓئِكَةَ ٱلَّذِينَ هُمْ عِبَٰدُ ٱلرَّحْمَٰنِ إِنَٰثًا ۚ أَشَهِدُوا۟ خَلْقَهُمْ ۚ سَتُكْتَبُ شَهَٰدَتُهُمْ وَيُسْـَٔلُونَ ⑲

(१९) तथा उनीहरुले दयालुका इबादत (उपासना) गर्ने फरिश्ताहरुलाई स्त्रीहरु बनाइहाले। के उनका जन्मका समय उनीहरु उपस्थित थिए ? उनको यो साक्ष्य लेखिहालिनेछ तथा उनीसित त्यसको सोधपूछ गरिनेछ ।[2]

وَقَالُوا۟ لَوْ شَآءَ ٱلرَّحْمَٰنُ مَا عَبَدْنَٰهُم ۗ مَّا لَهُم بِذَٰلِكَ مِنْ عِلْمٍ ۖ إِنْ هُمْ

(२०) तथा भन्छन् कि अल्लाह (तआला) चाहेको भए त हामीले उनको पूजा गर्दैनथ्यौं । उनीहरुलाई त्यसको केही ज्ञान छैन,[3] यिनी त केवल

---

[1] يُنَشَّؤُا यो نَشُوء धातुले बनेको छ पालनपोषणका अर्थमा नारीहरुका दुई गुणको वर्णन यहाँ विशेषरुपले गरिएको छ । (१)-उनको पालनपोषण आभूषणहरु तथा शोभामा हुन्छ, अर्थात् बोधका आँखा खुल्नासाथ उनको ध्यान शोभा एवं सौन्दर्यका वस्तुहरुतिर हुनजान्छ । अभिप्राय यस वर्णनबाट यो हो कि जसको दशा यो छ, उनी आफ्ना व्यक्तिगत विषयको सुधार गर्नुको पनि योग्यता तथा क्षमता राख्दैनन् । (२)-यदि कोहीसँग वाद-विवाद हुन्थ्यो भने उनी आफ्नो कुरा पनि सही ढङ्गले (प्राकृतिक लज्जाका कारण) स्पष्ट गर्न सक्दैनन्, न आफ्ना प्रतिद्वन्दीका तर्कलाई तोड्न सक्दैनन् । यो नारीको ती दुई प्राकृतिक कमजोरीहरु हुन् जसका कारण पुरुष स्त्रीमाथि एक गुणा प्रधानता राख्दछन् । वाक्यक्रमले पनि पुरुषको प्रधानता स्पष्ट छ, किनकि कुरा यसै प्रकरणमा अर्थात् नर-नारीमा जो स्वभाविक अन्तर छ जसका कारण बच्चीका मुक़ाबिलामा बच्चाको जन्मलाई अधिक रुचाइन्थ्यो, भइराखेको छ ।

[2] अर्थात् प्रतिकारका लागि, किनकि फरिश्ताहरु अल्लाहका पुत्री हुनुको कुनै प्रमाण उनको पासमा हुनेछैन ।

[3] अर्थात् स्वयं आफूबाट अल्लाहको इच्छाको सहारा यो उनको एउटा ठूलो तर्क हो, किनकि प्रत्येक रुपले यो कुरा सही छैन कि अल्लाहका बिना कुनै काम हुँदैन न हुनसक्छ। किन्तु यिनीहरु यसबाट अनभिज्ञ छन् कि उहाँको इच्छा, उहाँको प्रसन्नताभन्दा अलग कुरो हो । सबै कार्य निश्चय उहाँको इच्छाले हुन्छ, किन्तु उहाँ प्रसन्न तिनै कामबाट हुनुहुन्छ जसका उहाँले आदेश दिनुभएको छ, न कि प्रत्येक त्यस कर्मबाट जो मानिस अल्लाहको चाहतले गर्दछ। मानिस किनकि चोरी, कुकर्म, अत्याचार तथा ठूला-ठूला पाप गर्दछ ।

إِلَّا يَخْرُصُونَ ﴿٢٠﴾

(असत्य कुरा) भन्दछन् ।

أَمْ آتَيْنَاهُمْ كِتَابًا مِّن قَبْلِهِ فَهُم بِهِ مُسْتَمْسِكُونَ ﴿٢١﴾

(२१) के हामीले यसभन्दा पूर्व उनीहरुलाई (अन्य) कुनै किताब प्रदान गरेका छौं । जसलाई यिनीहरुले दृढताले समातेका छन् ?[1]

بَلْ قَالُوا إِنَّا وَجَدْنَا آبَاءَنَا عَلَىٰ أُمَّةٍ وَإِنَّا عَلَىٰ آثَارِهِم مُّهْتَدُونَ ﴿٢٢﴾

(२२) (होइन-होइन) बरु यिनीहरु त भन्दछन् कि हामीले आफ्ना पूर्वजहरुलाई एउटा धर्ममा पायौं तथा हामी उनैका पद-चिन्हहरुमा हिंडेर सन्मार्ग प्राप्त छौं ।

وَكَذَٰلِكَ مَا أَرْسَلْنَا مِن قَبْلِكَ فِي قَرْيَةٍ مِّن نَّذِيرٍ إِلَّا قَالَ مُتْرَفُوهَا إِنَّا وَجَدْنَا آبَاءَنَا عَلَىٰ أُمَّةٍ وَإِنَّا عَلَىٰ آثَارِهِم مُّقْتَدُونَ ﴿٢٣﴾

(२३) तथा यसैप्रकार तपाईंभन्दा पहिला पनि हामीले जुन वस्तीमा कुनै तर्साउनेवाला पठायौं, त्यहाँका सम्पूर्ण मानिसहरुले यही उत्तर दिए कि हामीले आफ्ना पूर्वजहरुलाई (एक मार्गमा एवं) एक धर्ममा पायौं तथा हामी त उनीहरुका पदचिन्हहरुको अनुगमन गर्नेहरु हौं ।

قُلْ أَوَلَوْ جِئْتُكُم بِأَهْدَىٰ مِمَّا

(२४) (नबीले) भन्नुभयो कि यद्यपि म त्यसभन्दा अतिउत्तम (लक्ष्यसम्म पुर्याउने) मार्ग

यदि अल्लाह चाहन्छ भने कसैलाई यो पाप गर्नुको सामर्थ्य न देओस्, तुरुन्त त्यसको हात समातिहालोस्, त्यसका खुट्टालाई रोकिदेओस्, त्यसका आँखा नदेख्ने गरिदेओस् । किन्तु यो दबाब हुनेछ, जबकि उहाँले मनुष्यलाई संकल्प तथा इच्छाको स्वाधीनता दिनुभएको छ ताकि त्यसको परीक्षा लिइयोस् । अत: उहाँले दुबै प्रकारका कर्महरुको स्पष्ट वर्णन गरिदिनु दिएको छ, जसबाट प्रसन्न हुन्छ उनका पनि तथा जसबाट अप्रसन्न हुन्छ तिनका पनि । मानिस दुबै प्रकारका कर्महरुमध्ये जो पनि कर्म गर्नेछ अल्लाहले त्यसको हात समात्ने छैन, किन्तु यदि त्यो काम अपराध तथा पाप पो हुनेछ त निश्चय त्यो त्यसबाट अप्रसन्न हुनेछ कि उसले अल्लाहद्वारा दिइएका अधिकारको गलत प्रयोग गऱ्यो । तैपनि अल्लाह यो अधिकार संसारमा त्यसबाट वापस लिनेछैन । हो, त्यसको दण्ड क़ेयामतका दिन दिनेछ ।

[1]अर्थात् क़ुर्‌आनबाट पहिला कुनै किताब जसमा उनलाई अल्लाह बाहेक कसैको उपासना (इबादत) गर्नुको अधिकार दिइएको छ, जसलाई उनीहरुले दृढतासाथ थामेका छन् ? अर्थात् यस्तो छैन बरु पूर्वजहरुका अनुगमनका अतिरिक्त उनीसित कुनै प्रमाण छैन ।

وَجَدتُّمْ عَلَيْهِ آبَاءَكُمْ ۖ قَالُوا إِنَّا بِمَا أُرْسِلْتُم بِهِ كَافِرُونَ ﴿٢٤﴾

लिएर आएको हुँ जसमाथि तिमीले आफ्ना पूर्वजहरुलाई पायौ त उनीहरुले उत्तर दिए कि हामी त्यसलाई मान्नेवाला छैनौं जे दिएर तिमीलाई पठाइएको छ ।[1]

فَانتَقَمْنَا مِنْهُمْ ۖ فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِينَ ﴿٢٥﴾

(२५) त हामीले उनीसित प्रतिशोध लियौं तथा हेरिहाल झुठ्लाउनेहरुको के परिणाम भयो ?

وَإِذْ قَالَ إِبْرَاهِيمُ لِأَبِيهِ وَقَوْمِهِ إِنَّنِي بَرَاءٌ مِّمَّا تَعْبُدُونَ ﴿٢٦﴾

(२६) तथा जबकि इब्राहीम (अलैहिस्सलाम) ले आफ्ना पितासित तथा आफ्ना समुदायसित भने कि म यी कुराहरुबाट अलग्ग छु जसको तिमी पूजा गर्दछौ ।

إِلَّا الَّذِي فَطَرَنِي فَإِنَّهُ سَيَهْدِينِ ﴿٢٧﴾

(२७) त्यस शक्तिका अतिरिक्त जसले मलाई पैदा गरेको छ तथा त्यसैले मेरो मार्गदर्शन गर्नेछ ।[2]

وَجَعَلَهَا كَلِمَةً بَاقِيَةً فِي

(२८) तथा इब्राहीम (अलैहिस्सलाम) त्यसैलाई आफ्नो सन्तानमा पनि शेष रहने कुरो[3]

[1]अर्थात् आफ्ना पूर्वजहरुको अनुगमनमा यदि पक्का थिए कि पैगम्बरको स्पष्टीकरण तथा तर्क पनि उनलाई फर्काउन सकेन । यो आयत अन्धा अनुगमनका खण्डन तथा त्यसको निन्दामा निकै ठूलो प्रमाण छ । (हेर्नुस् इमाम शौकानीको फ़तहुल क़दीर)

[2]अर्थात् जसले मलाई पैदा गरेको छ, त्यसले आफ्ना धर्मको समझ पनि मलाई दिनेछ तथा त्यसमाथि स्थिर राख्नेछ । म मात्र उसैको उपासना गर्नेछु ।

[3]अर्थात् यस धर्म-सूत्र لا إله إلا الله (ला इलाहा इल्लल्लाह) को वसीयत आफ्नो सन्तानलाई पनि गरेर गए । जस्तो भन्यो :

﴿وَوَصَّىٰ بِهَا إِبْرَاهِيمُ بَنِيهِ وَيَعْقُوبُ﴾

"इब्राहीम तथा याकूबले यसको वसीयत आफ्ना सन्तानलाई गरे ।" (अल-बक़र:-१३२)

केही विद्वानहरुले جعلها को (कर्ता) अल्लाहलाई मानेका छन्, अर्थात् अल्लाहले यस धर्म-सूत्रलाई इब्राहीम अलैहिस्सलामका पश्चात उनको सन्तानमा शेष राखे तथा उनी केवल एक अल्लाहका उपासक रहे ।

عَقِبِهِۦ لَعَلَّهُمْ يَرْجِعُونَ ۝٢٨

स्थापित गरेर गए ताकि मानिस (मिश्रणवादबाट) पन्छिदै रहून् ।[1]

بَلْ مَتَّعْتُ هَٰٓؤُلَآءِ وَءَابَآءَهُمْ حَتَّىٰ جَآءَهُمُ ٱلْحَقُّ وَرَسُولٌ مُّبِينٌ ۝٢٩

(२९) बरु मैले उनलाई तथा उनका पूर्वजहरुलाई सामान (एवं साधन)[2] प्रदान गरें यहाँसम्मकि उनका पासमा सत्य एवं स्पष्टरुपले सुनाउनेवाला रसूल आइहाल्यो ।[3]

وَلَمَّا جَآءَهُمُ ٱلْحَقُّ قَالُوا۟ هَٰذَا سِحْرٌ وَإِنَّا بِهِۦ كَٰفِرُونَ ۝٣٠

(३०) तथा सत्य आइपुग्नासाथ यिनीहरु भनिहाले कि यो त जादू हो तथा हामीले यसलाई अस्वीकार गर्दछौं ।[4]

وَقَالُوا۟ لَوْلَا نُزِّلَ هَٰذَا ٱلْقُرْءَانُ عَلَىٰ رَجُلٍ مِّنَ ٱلْقَرْيَتَيْنِ عَظِيمٍ ۝٣١

(३१) तथा भन्नलागे कि यो कुर्‌आन यी दुई वस्तीहरुमध्ये कुनै सम्पन्न (महान, सम्मानित) व्यक्तिमाथि किन अवतरित गरिएन ।[5]

[1]अर्थात् इब्राहीमको सन्तानमा यिनी एकेश्वरवादी यसकारण पैदा गरिए ताकि उनका तौहीद (अद्वैत) का उपदेशबाट मानिस शिर्क (मिश्रणवाद) बाट रोकिरहून् । لَعَلَّهُم मा सर्वनाम मक्कावासीहरुतिर फर्कन्छ । अर्थात् सम्भवतः मक्कावासी यस धर्मतिर फर्कि आउन् जो ईशदूत माननीय इब्राहीमको धर्म थियो जो विशुद्ध तौहीदमा आधारित थियो न कि शिर्क (बहुदेववाद) मा ।

[2]यहाँबाट पुनः ती वरदानहरुको चर्चा भइराखेको छ जो अल्लाहले उनीहरुलाई प्रदान गरेका थिए तथा वरदानहरुका पश्चात प्रकोपमा शीघ्रता गरेनन्, बरु उनलाई पूरा अवसर दिइए जसबाट उनी धोकामा परिहाले तथा मनका दास बनिहाले ।

[3]सत्यसित पवित्र कुर्‌आन तथा दूतसित आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम अभिप्राय हुन् । مُبِينٌ रसूलको विशेषण (गुण) हो, खुलारुपले वर्णन गर्नेवाला अथवा जसको ईशदूत हुने कुरो स्पष्ट छ । यसमा कुनै शंका र गोपनीयता छैन ।

[4]कुर्‌आनलाई जादू भनेर त्यसको इन्कार गरियो तथा त्यसको अघिका शब्दहरुमा आदरणीय नबी सल्लल्लाहु अलैहि वसल्लमको अपमान तथा निरादार गरे ।

[5]दुबै नगरहरुसित तात्पर्य मक्का तथा ताएफ़ हो तथा ठूला व्यक्तिहरुसित अभिप्राय अधिकतर भाष्यकारहरुका निकट मक्काको वलीद पुत्र मुगीरह तथा ताएफको उरवह पुत्र मसऊद सकफ़ी हो । केही ज्ञाताहरुले अझ अन्य मानिसहरुका नाम उल्लेख गरेका छन् । तैपनि उद्देश्य यसबाट एउटा यस्तो व्यक्तिको चुनाव छ

أَهُمْ يَقْسِمُونَ رَحْمَتَ رَبِّكَ ۚ نَحْنُ قَسَمْنَا بَيْنَهُم مَّعِيشَتَهُمْ فِي الْحَيَاةِ الدُّنْيَا ۚ وَرَفَعْنَا بَعْضَهُمْ فَوْقَ بَعْضٍ دَرَجَاتٍ لِّيَتَّخِذَ بَعْضُهُم بَعْضًا سُخْرِيًّا ۗ وَرَحْمَتُ رَبِّكَ خَيْرٌ مِّمَّا يَجْمَعُونَ ﴿٣٢﴾

(३२) के तपाईंका प्रभुको दयालाई यिनी वितरण गर्छन् ?[1] हामीले नै उनका सांसारिक जीवनका जीविका उनीहरुमा वितरण गरेका छौं तथा एकलाई अर्कोमाथि श्रेष्ठ गरेका छौं ताकि एक-अर्कालाई अधीनमा गरिहालून् ।[2] र जसलाई यिनीहरु एकत्रित गर्दै हिंड्छन्, त्यसभन्दा तपाईंका प्रभुका दया अति उत्तम छ ।[3]

وَلَوْلَا أَن يَكُونَ النَّاسُ أُمَّةً وَاحِدَةً

(३३) तथा यदि यो कुरो नभएको भए कि सब

जो अघिदेखि नै श्रेष्ठ पदवाला छ, धनवान एवं आफ्नो जातिमा मानिएको छ । अर्थात् यदि कुर्‌आन अवतरित हुन्थ्यो त दुबै नगरहरुमध्ये कुनै यस्ता व्यक्तिमाथि अवतरित हुन्थ्यो न कि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) माथि जससित संसारको धन छैन, न आफ्नो जातिमा नेतृत्व एवं प्रधानताका पदमा आसीन छन् ।

[1] رحمت (रहमत) अनुग्रहका अर्थमा छ, तथा यहाँ सबभन्दा ठूलो अनुग्रह 'नबूअत' अभिप्राय छ । प्रश्न नकारात्मक हो । अर्थात् यो काम उनको होइन कि प्रभुका वरदानहरु, विशेषरुपले नबूअत (दूतत्व) लाई आफ्नो इच्छाले वितरण गरून् । बरु यो केवल प्रभुको काम हो, किनकि त्यही सबैकुरा तथा प्रत्येक व्यक्तिको स्थितिसित पूर्णतः अवगत छ । त्यही बुझ्छ कि मानिसहरुमा नबूअतको ताज (मुकुट) कसका टाउकामा राख्नु छ तथा आफ्नो प्रकाशना (वह्य) सित कसलाई सम्मानित गर्नुछ ।

[2] अर्थात् धन-सम्पत्ति तथा मान-मर्यादा तथा बुद्धि एवं बोधमा यो अन्तर हामीले यसकारण राखेका छौं ताकि अधिक धनवाला कम धनवालासित, उच्च पदवाला तलका अधिकारीहरुसित तथा बोध एवं विवेकमा अधिक आफूभन्दा कम बुद्धि राख्नेसित काम लिन सकोस् । अल्लाहको यस पूर्ण हिक्मतले विश्व (सृष्टि) को व्यवस्था उत्तमरुपले चलिराखेको छ । यदि सबै धन, पद, ज्ञान तथा बोधमा तथा अन्य सांसारिक साधनहरुमा सामान भएको भए कोही कसैको काम गर्नका लागि तयार हुँदैनथ्यो । यसैप्रकार तुच्छ तथा हीन ठानिने कामलाई पनि कसैले गर्दैनथ्यो । यो मानवीय आवश्यकता हो जो अल्लाहले अन्तर तथा भिन्नतामा राखिदिएको हो, जसका कारण प्रत्येक मानिस अर्को मानिस बरु मानिसहरुको जरुरत राख्दछ । सबै मानवीय आवश्यकताहरु, कुनै व्यक्ति चाहे त्यो अरबपति किन नहोस्, अन्य व्यक्तिहरुको सहायताका बिना पूरा गर्न सक्दैन ।

[3] यस رحمت दयासित तात्पर्य आख़िरतका ती वरदान हुन् जो अल्लाहले आफ्ना सदाचारी भक्तहरुका लागि तयार गरेका छन् ।

لَّجَعَلْنَا لِمَن يَكْفُرُ بِالرَّحْمَٰنِ لِبُيُوتِهِمْ سُقُفًا مِّن فِضَّةٍ وَمَعَارِجَ عَلَيْهَا يَظْهَرُونَ ﴿٣٣﴾

मानिस एउटै तरीकाहरुमा भइहाल्नेछन्[1] त दयालुका साथ कुफ्र गर्नेहरुका घरको छानालाई हामीले चाँदीको बनाइदिन्थ्यौं तथा भऱ्याङहरुलाई पनि जसमाथि उनीहरु चढ्ने गर्दथे ।

وَلِبُيُوتِهِمْ أَبْوَابًا وَسُرُرًا عَلَيْهَا يَتَّكِئُونَ ﴿٣٤﴾

(३४) तथा उनका घरहरुका द्वार तथा तख्त (आसन) पनि जसमाथि उनी तकिया लगाएर बस्दथे ।

وَزُخْرُفًا ۚ وَإِن كُلُّ ذَٰلِكَ لَمَّا مَتَاعُ الْحَيَاةِ الدُّنْيَا ۚ وَالْآخِرَةُ عِندَ رَبِّكَ لِلْمُتَّقِينَ ﴿٣٥﴾

(३५) तथा स्वर्णका पनि,[2] तथा यी सबैथोक यस्तै सांसारिक लाभ हो तथा आख़िरत त तपाईंका प्रभुका निकट केवल सदाचारीहरुका लागि (नै) हो ।[3]

وَمَن يَعْشُ عَن ذِكْرِ الرَّحْمَٰنِ نُقَيِّضْ لَهُ شَيْطَانًا فَهُوَ لَهُ قَرِينٌ ﴿٣٦﴾

(३६) तथा जो व्यक्ति अल्लाहका स्मरणबाट आलस्य गर्दछ[4] हामी त्यसमाथि एउटा शैतान निर्धारित गरिदिन्छौं; त्यही त्यसको साथी रहन्छ ।[5]



[1]अर्थात् माया-मोहका कारण संसारका अभिलाषी भइहाल्नेछन् तथा परलोक एवं अल्लाहको प्रसन्नताको खोज बिर्सनेछन् ।

[2]अर्थात् केही कुराहरु चाँदीको तथा केही सुनको, किनकि विभिन्नतामा शोभा अधिक हुन्छ। अभिप्राय यो हो कि संसारको धन हाम्रो दृष्टिमा यति तुच्छ छ कि यदि उपरोक्त खतरा नभएको भए त अल्लाहका मुन्किरहरु (इन्कार गर्नेहरु) लाई निकै धन दिइन्थ्यो परन्तु त्यसमा भय यही थियो कि सबै माया-मोहमा नपरिहालून् । संसारको हीनता त्यस हदीसबाट पनि स्पष्ट हुन्छ जसमा भन्यो :

«لو كانت الدنيا تزن عند الله جناح بعوضة ما سقى منها كافرا شربة ماء»

"यदि संसारको मुल्य अल्लाहका निकट एउटा लामखुट्टेका प्वाँखको वरावर पनि भएको भए त अल्लाह तआला काफ़िरहरुलाई एक घुट्को पानी पनि दिंदैनथ्यो ।" (तिर्मिजी, इब्ने माजा, किताबुज़ ज़ोहद)

[3]जो मिश्रणवाद एवं पापहरुबाट पन्छिए तथा अल्लाहको आज्ञापालन गरिरहे उनका लागि परलोकका सुख एवं वरदान छन् जसका अन्त्य एवं विनाश छैन ।

[4]عَشَا يَعْشُو को अर्थ हो आँखाहरुको रोग रतौंधी तथा त्यसका कारण जो अन्धापन हुन्छ अर्थात् जो अल्लाहको याद (स्मरण) बाट अन्धा हुनजाओस् ।

[5]त्यो शैतान अल्लाहको यादको अपेक्षा गर्नेवालाको साथी बन्दछ तथा प्रत्येक

وَإِنَّهُمْ لَيَصُدُّونَهُمْ عَنِ السَّبِيلِ وَيَحْسَبُونَ أَنَّهُمْ مُهْتَدُونَ ﴿٣٧﴾

(३७) तथा उनीहरुलाई मार्गबाट रोक्दछन् तथा यिनी त्यसै विचारमा रहन्छन् कि यिनी सन्मार्ग प्राप्त छन् ।[1]

حَتَّىٰ إِذَا جَاءَنَا قَالَ يَا لَيْتَ بَيْنِي وَبَيْنَكَ بُعْدَ الْمَشْرِقَيْنِ فَبِئْسَ الْقَرِينُ ﴿٣٨﴾

(३८) यहाँसम्मकि जब त्यो हाम्रो पासमा आउने छ त भन्नेछ कि काश मेरो र तिम्रोमध्ये पूर्व एवं पश्चिमको दूरी हुन्थ्यो, तिमी बडो नराम्रो साथी हौ ।[2]

وَلَن يَنفَعَكُمُ الْيَوْمَ إِذ ظَّلَمْتُمْ أَنَّكُمْ فِي الْعَذَابِ مُشْتَرِكُونَ ﴿٣٩﴾

(३९) तथा जबकि तिमी अत्याचारी सिद्ध भइसक्यौ त तिमीलाई आज कदापि तिमी सबैको यातनामा सहभागी हुनु कुनै लाभकारी हुनेछैन ।

أَفَأَنتَ تُسْمِعُ الصُّمَّ أَوْ تَهْدِي الْعُمْيَ وَمَن كَانَ فِي ضَلَالٍ مُّبِينٍ ﴿٤٠﴾

(४०) त के तिमी बहिरालाई सुनाउन सक्दछौ अथवा अन्धोलाई मार्ग देखाउन सक्छौ तथा त्यसलाई जो खुल्ला मार्ग विचलनमा छ ।[3]

---

समय उनीसँग रहन्छ । अथवा मानिस स्वयं त्यसै शैतानको साथी बनाएर जान्छ तथा त्यसबाट अलग हुनसक्दैन बरु सबै विषयहरुमा त्यसको अनुगमन तथा सबै बहकावामा (विचलनमा) त्यसको अनुपालन गर्दछ ।

[1]अर्थात् ती शैतान त्यसका तथा सत्यमार्गका बीच बाधक बन्न जान्छन् तथा त्यसबाट उनलाई रोक्दछन् तथा उनलाई बराबर सम्झाइ रहन्छन् कि तिमी सत्यमा छौ, यहाँसम्मकि त्यो आफ्ना बारेमा यसै भ्रममा पर्छन कि त्यो सत्यमा छ । अथवा काफ़िर शैतानहरुका बारेमा यो ठान्दछन् कि यो सही हो तथा उनको अनुपालन गर्दैरहन्छन् । (फ़तहुल क़दीर)

[2] مَشْرِقَيْن दुई वचन हो । तात्पर्य पूर्व-परिश्च हुन् । فبئس القرين को विशेष्य लुप्त छ । أنت أيها الشيطان शैतान तिमी निकै नराम्रो साथी हौ । यो काफ़िर क़्यामतका दिन भन्नेछ किन्तु त्यसदिन यसलाई स्वीकारबाट के लाभ ?

[3]अर्थात् जसका लागि सधैंको दुर्भाग्य लेखिदिएको छ जो शिक्षा-दीक्षाबाट बहिरो तथा अन्धो छ । तिम्रो शिक्षा तथा सदुपदेशबाट त्यो सोझो मार्गमा आउन सक्दैन । यो प्रश्न नकारात्मक छ । जस्तै बहिरा सुन्नबाट तथा अन्धा देख्नबाट बञ्चित छ यसैप्रकार खुल्ला विचलनमा ग्रस्त व्यक्ति सत्यतिर आउनबाट बञ्चित छ । यो नबी सल्लल्लाहु अलैहि वसल्लमलाई सान्त्वना हो ताकि यस्ता मानिसहरुको कुफ्र (इन्कार) बाट तपाईं अधिक व्याकुलताको संवेदन नगर्नुस् ।

فَإِمَّا نَذْهَبَنَّ بِكَ فَإِنَّا مِنْهُم مُّنتَقِمُونَ ﴿٤١﴾

(४१) अनि यदि हामी तिमीलाई यहाँबाट[१] लगि पनि हाल्छौं तैपनि हामीले उनीसित बदला लिनेवाला छौं ।[२]

أَوْ نُرِيَنَّكَ الَّذِي وَعَدْنَاهُمْ فَإِنَّا عَلَيْهِم مُّقْتَدِرُونَ ﴿٤٢﴾

(४२) अथवा जे-जति उनीसित वाचा गरिएको छ[३] त्यो तिमीलाई देखाइदेऊन्; हामी ती माथि पनि सामर्थ्य राख्दछौं ।[४]

فَاسْتَمْسِكْ بِالَّذِي أُوحِيَ إِلَيْكَ ۖ إِنَّكَ عَلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿٤٣﴾

(४३) तसर्थ जो प्रकाशना तपाईंतिर गरिएको छ, त्यसलाई दृढताले थामिराख्नुस् ।[५] वस्तुत: तपाईं सोझो मार्गमा हुनुहुन्छ ।[६]

وَإِنَّهُ لَذِكْرٌ لَّكَ وَلِقَوْمِكَ ۖ

(४४) तथा नि:सन्देह यो (स्वयं) तपाईंका लागि तथा तपाईंका जातिका लागि शिक्षा हो तथा



[१]अर्थात् तिमीलाई मृत्यु आइहालोस् यसभन्दा पहिला कि उनीमाथि प्रकोप आओस् अथवा तिमीलाई मक्काबाट निकालेर लैजाऊन् ।

[२]संसारमै यदि हाम्रो इच्छाको माँग भयो । अन्य दशामा पारलौकिक यातनाबाट त त्यो कुनै रुपमा बच्न सक्दैन ।

[३]अर्थात् तिम्रो मृत्युभन्दा पूर्व अथवा मक्कामै तिमी रहँदै उनीमाथि प्रकोप पठाइदेओस् ।

[४]अर्थात् हामी जतिखेर चाहन्छौं उनीमाथि प्रकोप उतार्न सक्छौं किनकि हामी तिनीमाथि समर्थ छौं, जस्तो कि तपाईंका जीवनमै बद्रका रणमा काफ़िर शिक्षाप्रद पराजित तथा अपमान व्यहोर्नु पर्‍यो ।

[५]अर्थात् पवित्र कुरआनलाई चाहे कोही पनि झुठ्लाउँदै रहोस् ।

[६]त्यो فَاسْتَمْسِكْ को कारण हो ।

[७]यसलाई विशेष गर्नुको अभिप्राय यो होइन कि अरुहरुका लागि सदुपदेश होइन बरु प्रथम सम्बोधित किनकि कुरैश थिए, यसकारण उनको चर्चा गरियो । अन्यथा कुरआन त सम्पूर्ण जगत्का लागि सदुपदेश हो ।﴿وَمَا هُوَ إِلَّا ذِكْرٌ لِّلْعَالَمِينَ﴾(सूर: अल-क़लम-५२) जस्तो तपाईंलाई आदेश दियो कि ﴿وَأَنذِرْ عَشِيرَتَكَ الْأَقْرَبِينَ﴾ "आफ्ना समीपवर्ती सम्बन्धीहरुलाई तर्साइयोस् ।" (अश्शुअरा-२१४) यसको अभिप्राय यो होइन कि अल्लाहको उपदेश मात्र सम्बन्धीहरुलाई पुऱ्याउनु हो । बरु अर्थ यो हो कि आमन्त्रणको आरम्भ आफ्ना परिवारबाटै गर्नुस् । केही ज्ञाताहरुले यहाँ ذكر (ज़िक्र) को अर्थ प्रतिष्ठा लिएका छन् अर्थात् यो कुरआन तिम्रा जातिका लागि

وَسَوۡفَ تُسۡـَٔلُونَ ﴿٤٤﴾

निकट भविष्यमै तिमीहरु सोधिनेछौ ।

وَسۡـَٔلۡ مَنۡ أَرۡسَلۡنَا مِن قَبۡلِكَ مِن رُّسُلِنَآ أَجَعَلۡنَا مِن دُونِ ٱلرَّحۡمَٰنِ ءَالِهَةٗ يُعۡبَدُونَ ﴿٤٥﴾

(४५) तथा हाम्रा ती नबीहरुबाट पत्ता लगाउ जसलाई हामीले[1] तपाईंभन्दा पूर्व पठाएका थियौं कि के हामीले दयालुका अतिरिक्त अन्य पूज्यहरु निर्धारित गरेका थियौं जसको पूजा गरियोस् ?[2]

وَلَقَدۡ أَرۡسَلۡنَا مُوسَىٰ بِـَٔايَٰتِنَآ إِلَىٰ فِرۡعَوۡنَ وَمَلَإِيْهِۦ فَقَالَ إِنِّي رَسُولُ رَبِّ ٱلۡعَٰلَمِينَ ﴿٤٦﴾

(४६) तथा हामीले मूसा (अलैहिस्सलाम) लाई आफ्ना निशानीहरु दिएर फ़िरऔंन तथा त्यसका राज्य प्रमुखहरुका पास पठायौं त (मूसाले गएर) भने कि म सर्वलोकका प्रभुको रसूल (सन्देशवाहक) हूँ ।[3]

प्रतिष्ठाको हेतुमा छ कि यो उनको भाषामा उत्रयो । त्यसलाई उनी सर्वाधिक बुझ्नेवाला हुन् । यसद्वारा उनी पूरा विश्वमाथि प्रधानता प्राप्त गर्न सक्दछन् । यसकारण उनलाई आवश्यक छ कि यसलाई अप्नाउन तथा त्यसको माँगमा सर्वाधिक काम गरून् ।

[1]पैगम्बरहरुसित यो प्रश्न या त इस्रा तथा मेराजका अवसरमा बैतुल मोकद्दसमा भयो अथवा आकाशमा गरियो, जहाँ अम्बिया (ईशदूतहरु) सित नबी सल्लल्लाहु अलैहि वसल्लमको भेट भयो । अथवा أُمَمَ को शब्द लुप्त छ, अर्थात उनका अनुयायीहरु (अहले किताब-ग्रन्थधारी यहूदी एवं ईसाईहरु) सित सोध, किनकि उनीहरु तिनका शिक्षाहरुसित परिचित छन् तथा उनीमाथि अवतरित धर्मशास्त्र उनका पास मौजूद छन् ।

[2]उत्तर अवश्य (निःसन्देह) नकारात्मक छ, अल्लाहले कुनै पनि नबीलाई यो आदेश दिएन । बरु यसका विपरीत नबीलाई तौहीदका प्रचारकै आदेश दिइयो ।

[3]मक्काका कुरैशले भनेका थिए कि यदि अल्लाह कसैलाई नबी बनाएर पठाउँथ्यो त मक्का अथवा तायफ़मा कुनै यस्ता व्यक्तिमाथि पठाउँथ्यो जो धनी तथा पदाधिकारी हुन्थ्यो । जस्तै फ़िरऔनले पनि माननीय मूसाका मुकाबिलामा भनेका थिए कि म मूसाभन्दा उत्तम छु तथा यो मभन्दा हीन छ, यो त स्पष्टरुपले बोल्न पनि सक्दैन जस्तो कि अगाडी आइराखेको छ । सम्भवतः यसै समान स्थितिका कारण यहाँ मूसा तथा फ़िरऔन वाक्य दोहाऱ्याइंदैछ । यसका अतिरिक्त यसमा नबी सल्लल्लाहु अलैहि वसल्लमका लागि सान्त्वनाको पक्ष पनि छ कि आदरणीय मूसालाई पनि धेरै परीक्षाहरुबाट गुज्रनु पऱ्यो, उनीहरुले धैर्य तथा साहसले काम लिए । यसैप्रकार तपाईं पनि मक्काका काफ़िरहरुका कष्ट एवं अनुचित व्यवहारहरुबाट हताश नहुनुहोस्, धैर्य तथा साहसले काम लिनुस् आदरणीय मूसाका समान नै अन्ततः विजय तथा सफलता तपाईंकै छ

فَلَمَّا جَآءَهُم بِـَٔايَـٰتِنَآ إِذَا هُم مِّنْهَا يَضْحَكُونَ ﴿٤٧﴾

(४७) त जब उनी हाम्रा निशानीहरु लिएर उनका निकट आए त उनीहरु सहसा उनीमाथि हाँस्न लागे ।[1]

وَمَا نُرِيهِم مِّنْ ءَايَةٍ إِلَّا هِىَ أَكْبَرُ مِنْ أُخْتِهَا ۖ وَأَخَذْنَـٰهُم بِٱلْعَذَابِ لَعَلَّهُمْ يَرْجِعُونَ ﴿٤٨﴾

(४८) तथा हामीले जो निशानी उनलाई देखाउँथ्यौं, उनीहरु अन्यभन्दा बढी-चढी हुन्थे ।[2] तथा हामीले उनीहरुलाई यातनामा समात्यौं ताकि उनीहरु रोकिइहालून् ।[3]

وَقَالُوا۟ يَـٰٓأَيُّهَ ٱلسَّاحِرُ ٱدْعُ لَنَا رَبَّكَ بِمَا عَهِدَ عِندَكَ إِنَّنَا لَمُهْتَدُونَ ﴿٤٩﴾

(४९) तथा उनीहरुले भने कि हे जादूगर,[4] हाम्रा लागि आफ्ना प्रभुसित त्यसको[5] प्रार्थना गर जसको उसले तिमीलाई वचन दिएको छ ।[6] विश्वास

तथा यी मक्कावासी फ़िर्‌औनकै जस्तै असफल तथा पराजित हुनेछन् ।

[1]जब आदरणीय मूसाले फ़िरऔन तथा त्यसका दरबारियाहरुलाई तौहीद (एकेश्वरवाद) को आमन्त्रण दिए त उनीहरुले उनको ईशदूत हुने कुरोको प्रमाण माँगे जसमाथि उनले त्यो चमत्कार एवं प्रमाण प्रस्तुत गरे, जो अल्लाहले उनीहरुलाई प्रदान गरेका थिए, जसलाई देखेर उनीहरुलाई उपहास गरे तथा भने कि यी कुन चाहिं ठूला कुरा हुन्, यी त जादूद्वारा हामी पनि प्रस्तुत (पेश) गर्न सक्दछौं ।

[2]यी निशानीहरुसित ती निशानीहरु अभिप्राय हुन् जो तूफान, टिड्डी दल (सलह), जुका, भ्यागुता तथा रक्त आदिको रुपमा देखाइए, जसको चर्चा सूर: आराफ आयत न. १३३-१३५ मा आइसकेको छ । पछिका प्रत्येक निशानी पहिला निशानीभन्दा ठूलो हुन्थे, जसबाट माननीय मूसाको सच्चाई स्पष्टभन्दा स्पष्टतम् हुन जान्थ्यो ।

[3]उद्देश्य यी निशानीहरु अथवा प्रकोपबाट यो हुन्थ्यो कि शायद उनी झुठ्लाउनबाट रोकियून् ।

[4]विद्वानहरु भन्छन् कि त्यस युगमा जादू नराम्रो कुरा हुन्नथ्यो तथा विद्वानहरुलाई पनि सम्मान स्वरुप जादूगर भनिन्थ्यो । यसका अतिरिक्त, चमत्कार तथा निशानीहरुका सम्बन्धमा पनि उनको विचार थियो कि यो मूसाको जादू-कलाको चमत्कार हो । यसकारण उनीहरुले मूसा अलैहिस्सलाममलाई तान्त्रिक शब्दबाट सम्बोधित गरे ।

[5]आफ्ना प्रभुबाट का शब्द आफ्नो मिश्रणवादी (अनेकेश्वरवादी) मानसिकताका कारण भने, किनकि अनेकेश्वरवादीहरुमा अनेक प्रभु तथा पूज्य हुन्थे, मूसा आफ्ना प्रभुबाट यो काम गराइहाल ।

[6]अर्थात् हामीबाट ईमान स्वीकार गर्नुका पश्चात प्रकोप हटाइदिनुको वचन ।

गर कि हामी मार्गमा लागिहाल्नेछौं ।[१]

فَلَمَّا كَشَفْنَا عَنْهُمُ الْعَذَابَ إِذَا هُمْ يَنْكُثُونَ ﴿٥٠﴾

(५०) अनि जब हामीले उनीबाट त्यो प्रकोप हटाइहाल्यौं त त्यसैबेला आफ्नो वचन तथा प्रतिज्ञा तोडिदियो ।

وَنَادَىٰ فِرْعَوْنُ فِي قَوْمِهِ قَالَ يَٰقَوْمِ أَلَيْسَ لِي مُلْكُ مِصْرَ وَهَٰذِهِ الْأَنْهَٰرُ تَجْرِي مِن تَحْتِيٓ ۖ أَفَلَا تُبْصِرُونَ ﴿٥١﴾

(५१) तथा फिर्‌औनले आफ्ना समुदायमा घोषणा गरायो तथा भन्यो[२] कि हे मेरो जातिका मानिस, के मिश्र देश मेरो होइन तथा मेरा राजभवनहरुका मुनि जो यी नहर बगिराखेका छन् ?[३] के तिमी देख्दैनौ ?

أَمْ أَنَا۠ خَيْرٌ مِّنْ هَٰذَا الَّذِي هُوَ مَهِينٌ ۙ وَلَا يَكَادُ يُبِينُ ﴿٥٢﴾

(५२) बरु म श्रेष्ठ छु यसको अपेक्षा जो हीन छ[४] तथा स्पष्ट बोल्न पनि सक्दैन ।[५]

فَلَوْلَا أُلْقِيَ عَلَيْهِ أَسْوِرَةٌ مِّن ذَهَبٍ أَوْ جَآءَ مَعَهُ الْمَلَٰٓئِكَةُ مُقْتَرِنِينَ ﴿٥٣﴾

(५३) त, यसमाथि स्वर्गका कंगन किन उत्रेनन्[६] अथवा त्यसका साथ झुण्ड एवं जुलुसका रुपमा

[१]यदि यो प्रकोप हटिहाल्यो भने हामीले तिमीलाई अल्लाहको सच्चा रसूल मान्नेछौं तथा तिम्रो प्रभुको उपासना गर्नेछौं, जस्तो कि आगामी आयतमा छ तथा सूरः आराफमा पनि गुज्रयो ।

[२]जब माननीय मूसाले यस्ता कैयन् निशानीहरु प्रस्तुत गरिदिए जो एक से बढकर एक थिए त फिर्‌औनलाई यो भय भयो कि कहीं मेरो जाति मूसातिर आकर्षित नहोऊन् । यसकारण उसले आफ्नो पराजयको धब्बा लुकाउनका लागि तथा समुदायलाई निरन्तर धोखामा राख्नका लागि यो नयाँ चाल चल्यो कि आफ्ना शासन तथा अधिकारका सन्दर्भबाट मूसाको निरादर तथा अपमान देखाइयोस् ताकि मेरो जाति मेरा राज्य तथा अधिपत्यबाट नै भयभीत रहोस् ।

[३]यसबाट अभिप्राय नील नदी अथवा त्यसका केही शाखाहरु हुन् जो त्यसका राजभवनका मुनिबाट गुज्रन्थे ।[४]

[४]أَمْ इजराब अर्थात् एक विषयबाट कुरालाई दोस्रो विषयतिर मोड्नका लागि अर्थात بَلْ (बरु) का अर्थमा छ । केही ज्ञाताहरुका विचारमा प्रश्नवाची नै हो ।

[५]यो ईशदूत मूसा अलैहिस्सलामका भकभकेपनातिर संकेत छ जस्तो कि सूरः ताहामा गुज्रयो ।

[६]त्यस युगमा मिश्र तथा ईरानका राजा आफ्नो विशेषता देखाउनका लागि सुनका कंगन लगाउँथे तथा घाँटीमा सुनको तौक़ (रिङ्ग) तथा सिकडी लगाउँथे जो उनका प्रधानताका प्रतीक ठानिन्थ्यो । यसैकारण फिर्‌औनले आदरणीय मूसाका विषयमा भन्यो कि

फरिश्ताहरु नै आइदिन्थे ।[1]

فَاسْتَخَفَّ قَوْمَهُ فَأَطَاعُوهُ ۚ إِنَّهُمْ كَانُوا قَوْمًا فَاسِقِينَ ﴿٥٤﴾

(५४) त उसले आफ्नो जातिका मानिसहरुलाई प्रलोभन दियो । तथा उनीहरुले त्यसैको मानिहाले ।[2] नि:सन्देह तिनीहरु सम्पूर्ण नै अवज्ञाकारी थिए ।

فَلَمَّا آسَفُونَا انتَقَمْنَا مِنْهُمْ فَأَغْرَقْنَاهُمْ أَجْمَعِينَ ﴿٥٥﴾

(५५) अनि जब उनले हामीलाई क्रोधित गरे त हामीले उनीसित बदला लियौं तथा सबैलाई डुबाइदियौं ।

فَجَعَلْنَاهُمْ سَلَفًا وَمَثَلًا لِّلْآخِرِينَ ﴿٥٦﴾

(५६) र हामीले उनीहरुलाई बरबाद गरिदियौं तथा पछिका मानिसहरुका लागि नमूना बनाइदियौं ।[3]

وَلَمَّا ضُرِبَ ابْنُ مَرْيَمَ مَثَلًا إِذَا قَوْمُكَ مِنْهُ يَصِدُّونَ ﴿٥٧﴾

(५७) तथा जब मरियमका पुत्रको उदाहरण वर्णन गरियो त त्यससित तिम्रो समुदाय (प्रसन्नताले) पुकार्‍यो ।

وَقَالُوا أَآلِهَتُنَا خَيْرٌ أَمْ هُوَ ۚ مَا ضَرَبُوهُ لَكَ إِلَّا جَدَلًا ۚ بَلْ هُمْ قَوْمٌ خَصِمُونَ ﴿٥٨﴾

(५८) तथा उनीहरुले भने कि हाम्रा देवता राम्रा छन् अथवा त्यो ? तिमीसित उनले यो भन्नु मात्र झगडाका उद्देश्यले छ, बरु यिनीहरु छन् नै झगडालु ।[4]

---

यदि उसको कुनै मर्यादाको विशेषता भएको भए एवं कुनै स्थान भएको भए त त्यसका हातमा सुनका कङ्गन हुनुपर्थ्यो ।

[1]जो यस कुराको पुष्टि गर्दछन् कि यो अल्लाहको रसूल (ईशदूत) हो अथवा राजाहरुका समान त्यसको प्रतिष्ठालाई प्रत्येक्ष गर्नका लागि उसका साथ हुन्थे ।

[2]अर्थात् उसले आफ्नो जातिको बुद्धिलाई हल्का ठान्यो अथवा गरिदियो तथा उनलाई आफ्नो मूर्खता एवं कुपथमा अडिग रहनुको ताकेदा गर्‍यो, तथा जाति उसको अनुगामी बनिहाल्यो ।

[3]آسَفُونَا بمعنى أسخطونا अथवा أغضبونا का अर्थमा छ अर्थात् हामीलाई क्रोधित गरिदियो سَلَفٌ यो سَالِفٌ को बहुवचन हो । जस्तै خادم، خدم को तथा حَرَسٌ को حارس अर्थात् पछि आउनेहरुका लागि उनलाई शिक्षाप्रद तथा नमूना बनाइदियो कि उनी यसप्रकार कुफ्र एवं अत्याचार तथा बडाई एवं उपद्रव नगरून् । जस्तो फ़िर्औनले गर्‍यो ताकि उनी यस जस्ता शिक्षाप्रद दुष्परिणामबाट सुरक्षित रहून् ।

[4]शिर्क (अनेकेश्वरवाद) का खण्डन तथा मिथ्या उपास्यहरुको हीनतालाई स्पष्ट गर्नका लागि जब मक्काका मूर्तिपूजकहरुसित भनिन्थ्यो कि तिम्रो साथमा

إِنْ هُوَ إِلَّا عَبْدٌ أَنْعَمْنَا عَلَيْهِ وَجَعَلْنَٰهُ مَثَلًا لِّبَنِيٓ إِسْرَٰٓءِيلَ ﴿٥٩﴾

(५९) उनी (ईसा अलैहिस्सलाम) पनि केवल भक्त नै हुन्, जसमाथि हामीले उपकार गऱ्यौं तथा उसलाई इस्राईलका सन्तानका लागि (आफ्ना सामर्थ्यको) निशानी बनायौं ।[1]

तिम्रो देवता पनि जानेछन् त यससित अभिप्राय ती पत्थरका मूर्तिहरु हुन्छन् जसको उनीहरुले पूजा गर्दथे, न कि ती सत्कर्मीहरु जो आफ्ना जीवनमा मानिसहरुलाई तौहीद (अद्वैत) को आमन्त्रण दिंदैरहे किन्तु उनका निधनका पश्चात उनीप्रति श्रद्धालु मानिसहरुले उनलाई पूज्य ठान्न आरम्भ गरिदिए । यसका सम्बन्धमा त कुर्‌आन करीमले नै स्पष्ट गरिदिएको छ कि यिनी नरकबाट टाढा रहनेछन् ।

﴿ إِنَّ الَّذِينَ سَبَقَتْ لَهُم مِّنَّا الْحُسْنَىٰٓ أُولَٰٓئِكَ عَنْهَا مُبْعَدُونَ ﴾

"निःसन्देह जसका लागि हाम्रो तर्फबाट पुण्य पूर्व नै निश्चित भइसकेको छ उनीहरु सबै नरकभन्दा टाढा नै राखिनेछन् ।" (अल-अम्बिया-१०१)

किनकि यसमा उनको कुनै दोष थिएन । यसकारण पवित्र कुर्‌आनले यसका लागि जो शब्द प्रयोग गरेको छ, त्यो शब्द مَا हो जो निर्जीवका लागि उपर्युक्त हुन्छ ।

﴿ إِنَّكُمْ وَمَا تَعْبُدُونَ مِن دُونِ اللَّهِ حَصَبُ جَهَنَّمَ ﴾

"तिमी अल्लाहका अतिरिक्त ज-जसको तिमी पूजा गर्दछौ, सबै नरकका इन्धन बन्नेछौ ।" (अल-अम्बिया-९८)

यसबाट अम्बिया (अलैहिमुस्सलाम) तथा त्यो धर्मात्मा निस्किहाले जसलाई मानिसहरुले आफ्ना विचारले पूज्य बनाइराखेको हुनेछन् । अर्थात् यो त सम्भव छ कि अन्य मूर्तिहरुका साथ उनका समरुप बनाइएका मूर्तिहरु पनि अल्लाह तआला नरकमा हालिदेओस् किन्तु उनीहरु त प्रत्येक स्थितिमा नरकबाट टाढा नै रहनेछन् । किन्तु मूर्तिपूजक रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमका मुखबाट ईशदूत ईसाको शुभ चर्चा सुनेर झगड्दथे कि जब ईसा प्रशंसनीय छन् यद्यपि ईसाईहरुले उनलाई पूज्य बनाएका छन् त त्यसपछि हाम्रा पूज्य नरकमा जानेछन् भने आरदणीय ईसा तथा उजैर पनि नरकमा जानेछन् । अल्लाहले यहाँ भन्नुभयो : यिनी खुशीमा चिच्याउनु केवल उनको झगड्नु हो । جَدَل को अभिप्राय नै यो हुन्छ कि झगडालु जान्दछ कि त्यससँग कुनै प्रमाण छैन परन्तु केवल आफ्नो कुराका पक्षमा वाद-विवादबाट रोकिंदैन ।

[1]एक, यसकारण कि बिना पिता उनको जन्म भयो । दोस्रो, स्वयं उनलाई चमत्कार दिइए, मृत्युहरुलाई जीवित गर्नु आदि, यसकारण पनि ।

وَلَوۡ نَشَآءُ لَجَعَلۡنَا مِنكُم مَّلَٰٓئِكَةٗ فِي ٱلۡأَرۡضِ يَخۡلُفُونَ ۝٦٠

(६०) यदि हामीले चाहेको भए त तिम्रो ठाउँमा फरिश्ताहरुलाई गरिदिन्थ्यौं जो धर्तीमा एक-अर्काको उत्तराधिकारीको काम गर्दथे ।[1]

وَإِنَّهُۥ لَعِلۡمٞ لِّلسَّاعَةِ فَلَا تَمۡتَرُنَّ بِهَا وَٱتَّبِعُونِۚ هَٰذَا صِرَٰطٞ مُّسۡتَقِيمٞ ۝٦١

(६१) तथा निःसन्देह उनी (ईसा अलैहिस्सलाम) केयामतका लक्षण हुन्,[2] तसर्थ तिमी केयामतका विषयमा सन्देह नगर तथा मेरो कुरा मानिहाल, यही सोझो मार्ग हो ।

وَلَا يَصُدَّنَّكُمُ ٱلشَّيۡطَٰنُۖ إِنَّهُۥ لَكُمۡ عَدُوّٞ مُّبِينٞ ۝٦٢

(६२) तथा शैतानले तिमीलाई रोकि नदेओस्, निश्चय त्यो तिम्रो खुल्ला शत्रु हो ।

وَلَمَّا جَآءَ عِيسَىٰ بِٱلۡبَيِّنَٰتِ قَالَ قَدۡ جِئۡتُكُم بِٱلۡحِكۡمَةِ وَلِأُبَيِّنَ لَكُم بَعۡضَ ٱلَّذِي تَخۡتَلِفُونَ فِيهِۖ

(६३) तथा जब ईसा (अलैहिस्सलाम) चमत्कार ल्याए त भने कि म तिम्रा निकट हिक्मत (ज्ञान) ल्याएको हूँ तथा यसकारण आएको हूँ कि जुन केही कुराहरुमा तिमी मतभेद गर्दछौ,

---

[1] अर्थात् तिम्रो अन्त गरी तिम्रो साटो धर्तीमा फरिश्ताहरुलाई बसाइदिन्थ्यौं, जो तिमी जस्तै एक-अर्काका उत्तराधिकारी हुन्थे । अभिप्राय यो हो कि फरिश्ताहरुको आकाशमा बसाइ यस्तो श्रेष्ठता होइन कि उनको उपासना गरियोस्, यो त हाम्रो इच्छा तथा निर्णय हो कि उनको उपासना गरियोस्, यो त हाम्रो इच्छा तथा निर्णय हो कि फरिश्ताहरुलाई आकाशमा तथा मानिसहरुलाई धर्तीमा बसायौं । हामीले चाहयौं भने फरिश्ताहरुलाई धर्तीमा पनि बसाउन सक्छौं ।

[2] عِلْمٌ (इल्म) लक्षण तथा निशानाका अर्थमा छ । अधिकांश व्याख्याकारहरुका निकट यसको अभिप्राय यो हो कि केयामतका निकट आकाशबाट अवतरण हुनेछ, जस्तो कि विशुद्ध निरन्तर हदीसहरुबाट सिद्ध छ । यो अवतरण यस कुराको लक्षण हुनेछ कि अब प्रलय निकट छ । यसकारण केही विद्वानहरुले अक्षर 'ऐन तथा लाम' का ज़बर (दुवैमाथि 'अ' को मात्रा) का साथ عَلَمٌ पढेका छन् जसको अर्थ नै लक्षण तथा चिन्ह हो । केही विद्वानका विचारमा तिनलाई प्रलयको लक्षण मान्नु उनका चमत्कारहरु तथा जन्मका आधारमा छ । अर्थात् जस्तो अल्लाहले उनलाई बिना पिता पैदा गर्‍यो, उनको यो जन्म यस कुराको प्रतीक हो कि अल्लाह केयामत (प्रलय) का दिन सबै मानिसहरुलाई पुनः जीवन प्रदान गर्नेछ । अतः अल्लाहका सामर्थ्यलाई हेर्दै केयामत हुनुमा कुनै सन्देह छैन । إِنَّهُ मा सर्वनाम आदरणीय ईसातिर संकेत छ ।

فَاتَّقُوا اللّٰهَ وَأَطِيعُونِ ﴿٦٣﴾

तिनलाई स्पष्ट गरिदिऊँ,[1] त तिमी अल्लाह (तआ़ला) सित तर्स तथा मैले भनेको मान ।

إِنَّ اللّٰهَ هُوَ رَبِّي وَرَبُّكُمْ فَاعْبُدُوهُ ۚ هٰذَا صِرَاطٌ مُّسْتَقِيمٌ ﴿٦٤﴾

(६४) मेरो एवं तिम्रो प्रभु मात्र अल्लाह (तआ़ला) नै हो तसर्थ तिमी सबै त्यसको इबादत गर । सोझो मार्ग यही हो ।

فَاخْتَلَفَ الْأَحْزَابُ مِنْ بَيْنِهِمْ ۖ فَوَيْلٌ لِّلَّذِينَ ظَلَمُوا مِنْ عَذَابِ يَوْمٍ أَلِيمٍ ﴿٦٥﴾

(६५) अनि (इस्राईलको सन्तानका) गुटहरुले आपसमा मतभेद गरे,[2] तसर्थ अत्याचारीहरुका लागि खराबी छ दुखवाला दिनको यातनाबाट ।

هَلْ يَنظُرُونَ إِلَّا السَّاعَةَ أَن تَأْتِيَهُم بَغْتَةً وَهُمْ لَا يَشْعُرُونَ ﴿٦٦﴾

(६६) यिनीहरु मात्र केयामतको प्रतीक्षामा छन् कि त्यो सहसा उनीमाथि आइपरोस् तथा उनीहरुलाई सूचना पनि नहोस् ।

الْأَخِلَّاءُ يَوْمَئِذٍ بَعْضُهُمْ لِبَعْضٍ عَدُوٌّ إِلَّا الْمُتَّقِينَ ﴿٦٧﴾

(६७) त्यसदिन (घनिष्ट) मित्र पनि एक-अर्काका शत्रु बन्नेछन्, सदाचारीहरुका अतिरिक्त ।[3]

يَا عِبَادِ لَا خَوْفٌ عَلَيْكُمُ الْيَوْمَ وَلَا أَنتُمْ

(६८) हे मेरा भक्तहरु ! आज तिमीमाथि न कुनै भय



[1]यसका लागि हेर्नुस् आले इमरान आयत न.५ को व्याख्या ।

[2]यसबाट तात्पर्य यहूदी तथा इसाई हुन् । यहूदीहरुले आदरणीय ईसा अलैहिस्सलामको निन्दा गरे तथा उनलाई (अल्लाहको शरण) व्यभिचारको पुत्र भने जबकि इसाईहरुले अतिश्योक्तिले काम लिएर उनलाई उपास्य बनाइहाले । अथवा अभिप्राय इसाईहरुका विभिन्न गिरोह हुन् जो आदरणीय ईसाका विषयमा एक अर्कासित कडा विरोध गर्दछन् । एक, उनलाई अल्लाहको पुत्र, दोस्रो अल्लाह, तेस्रो तीन उपास्यहरुको तेस्रो भन्दछ तथा एक गिरोह मुसलमानहरुको जस्तै उनलाई अल्लाहको दास तथा त्यसको पैग़म्बर (सन्देशवाहक) मान्दछ ।

[3]किनकि काफ़िरहरुको मित्रता कुफ्र तथा अवज्ञा एवं उल्लंघनका आधारमा हुन्छ तथा यही अवज्ञा उनको यातनाको कारण हुनेछ, जसको कारणले उनी एक-अर्कालाई दोष दिनेछन् तथा परस्पर शत्रु भइहाल्नेछन् । यसका विपरीत किनकि ईमानवाला तथा सदाचारीहरुको मित्रता अल्लाहको प्रसन्नताको आधारमा हुन्छ तथा यही धर्म एवं ईमान सत्कर्म तथा पुण्यको कारण छ । उनीसित उनको मित्रतामा कुनै कट्टा हुनेछैन । त्यो यसैप्रकार स्थापित रहनेछ जुनप्रकार जगतमा थियो ।

تَحْزَنُوْنَ ﴿٦٨﴾

तथा डर छैन तथा न तिमी शोकग्रस्त हुनेछौ ।[१]

اَلَّذِيْنَ اٰمَنُوْا بِاٰيٰتِنَا وَكَانُوْا مُسْلِمِيْنَ ﴿٦٩﴾

(६९) जो हाम्रा आयतहरुमाथि ईमान स्वीकार गरे तथा उनी थिए पनि (आज्ञाकारी) मुसलमान ।

اُدْخُلُوا الْجَنَّةَ اَنْتُمْ وَاَزْوَاجُكُمْ تُحْبَرُوْنَ ﴿٧٠﴾

(७०) तिमी तथा तिम्रा पत्नीहरु आनन्दित एवं प्रसन्न भई स्वर्गमा गइहाल ।[२]

يُطَافُ عَلَيْهِمْ بِصِحَافٍ مِّنْ ذَهَبٍ وَّاَكْوَابٍ ۚ وَفِيْهَا مَا تَشْتَهِيْهِ الْاَنْفُسُ وَتَلَذُّ الْاَعْيُنُ ۚ وَاَنْتُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٧١﴾

(७१) उनका चारैतिर स्वर्णका थालहरु तथा स्वर्णका गिलासहरुको दौर चलाइनेछ ।[३] उनका मन जुन वस्तुलाई चाहन्छन् तथा जसबाट उनका आँखा आनन्द प्राप्त गर्छन् सबै त्यहाँ हुनेछ तथा तिमी त्यसमा सधैं रहनेछौ ।[४]

وَتِلْكَ الْجَنَّةُ الَّتِيْٓ اُوْرِثْتُمُوْهَا بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٧٢﴾

(७२) तथा यही त्यो स्वर्ग हो कि तिमी आफ्ना कर्महरुका प्रतिफल स्वरुप यसका उत्तराधिकारी बनाइएका हौ ।

لَكُمْ فِيْهَا فَاكِهَةٌ كَثِيْرَةٌ مِّنْهَا تَاْكُلُوْنَ ﴿٧٣﴾

(७३) यहाँ तिम्रा लागि अत्याधिक फलहरु छन् जसलाई तिमी खाइरहनेछौ ।

---

[१]यो केयामतका दिन ती सदाचारीहरुसित भनिनेछ जो संसारमा मात्र अल्लाहको प्रसन्नताका लागि आपसमा प्रेम राख्दथे, जस्तो कि हदीसहरुमा पनि त्यसको महत्व आएको छ । बरु अल्लाहका लागि मित्रता तथा वैरलाई पूर्ण ईमानको आधार भनिएको छ ।

[२]صحاف सित केही ज्ञाताहरुले ईमान्दार पत्नीहरु, केहीले ईमान्दार साथी र केहीले स्वर्गका हूरहरु भावार्थ लिएका छन् । उनी सबै सही छन् किनकि स्वर्गमा यो सबैथोक नै हुनेछ ।

[३]صحاف यो صَحْفَةٌ को बहुवचन हो, प्लेट, थाली । सबभन्दा ठूलो भाँडालाई جَفْنَةٌ भनिन्छ । त्यसभन्दा सानो قَصْعَةٌ जसबाट दस व्यक्तिको पेट भर्दछ । अनि صَحْفَةٌ (قصعة को आधा) अनि مِكْيَلَةٌ छ । अभिप्राय यो हो कि स्वर्गवासीहरुलाई जो भोजन प्राप्त हुनेछ, त्यो सुनका थालीहरुमा हुनेछन् । (फ़तहुल क़दीर)

[४]अर्थात् जस्तो एउटा उत्तराधिकारी उत्तराधिकारको मालिक हुन्छ, त्यसैप्रकार स्वर्ग पनि एउटा उत्तराधिकार हो जसका उत्तराधिकारी उनीहरु हुनेछन् जसले संसारमा ईमान तथा सदाचारको जीवन निर्वाह गरेका हुनेछन् ।

إِنَّ الْمُجْرِمِينَ فِي عَذَابِ جَهَنَّمَ خَٰلِدُونَ ﴿٧٤﴾

(७४) नि:सन्देह पापीहरु नरकको यातनामा सधैं रहनेछन् ।

لَا يُفَتَّرُ عَنْهُمْ وَهُمْ فِيهِ مُبْلِسُونَ ﴿٧٥﴾

(७५) यो (यातना) कहिल्यै पनि उनीबाट हलुङ्गो गरिने छैन तथा उनीहरु त्यसैमा निराश परेका हुन्छन् ।[1]

وَمَا ظَلَمْنَٰهُمْ وَلَٰكِن كَانُوا۟ هُمُ الظَّٰلِمِينَ ﴿٧٦﴾

(७६) तथा हामीले उनीमाथि अत्याचार गरेनौं बरु उनी स्वयं नै अत्याचारी थिए ।

وَنَادَوْا۟ يَٰمَٰلِكُ لِيَقْضِ عَلَيْنَا رَبُّكَ ۖ قَالَ إِنَّكُم مَّٰكِثُونَ ﴿٧٧﴾

(७७) तथा उनीहरु पुकारी-पुकारी भन्नेछन् कि हे मालिक,[2] तिम्रो प्रभुले हाम्रो काम नै समाप्त गरिदेओस्,[3] त्यसले भन्नेछ कि तिमीलाई त सधैं रहनुछ ।[4]

لَقَدْ جِئْنَٰكُم بِالْحَقِّ وَلَٰكِنَّ أَكْثَرَكُمْ لِلْحَقِّ كَٰرِهُونَ ﴿٧٨﴾

(७८) हामी त तिम्रो पासमा सत्य लिएर आयौं परन्तु तिमीमध्ये अधिकतर मानिस सत्यसित[5] घृणा गर्नेहरु थिए ।

أَمْ أَبْرَمُوٓا۟ أَمْرًا فَإِنَّا مُبْرِمُونَ ﴿٧٩﴾

(७९) के उनीहरुले कुनै कार्यको दृढ विचार गरिहालेछन् ? त विश्वास गर कि हामी पनि सुदृढ कार्य गर्नेवाला हौं ।[6]

---

[1]अर्थात् मोक्षबाट निराश ।

[2]मालिक, नरकको दरोगाको नाम हो ।

[3]अर्थात् हामीलाई मृत्यु नै दिइहाल । ताकि यातनाबाट प्राणले मुक्ति पाओस् ।

[4]अर्थात् त्यहाँ मृत्युकहाँ ? किन्तु यो यातनाको जीवन मृत्युभन्दा पनि नराम्रो हुनेछ । तैपनि त्यसबाहेक कुनै उपाय हुनेछैन ।

[5]यो अल्लाहको कथन हो अथवा अल्लाहको तर्फबाट फरिश्ताहरुको कथन हो । जस्तै कोही अधिकारी 'हामी' को प्रयोग सरकारका अर्थमा प्रयोग गर्दछ । अधिकांशसित अभिप्राय प्रमुख तथा लीडर हुन् । शेष नरकवासी उनका अनुयायी हुनुका कारण त्यसमा सम्मिलित हुनेछन् । सत्यसित तात्पर्य अल्लाहको त्यो धर्म तथा सन्देश हो जो त्यसले पैग़म्बरहरुद्वारा पठाउँदै गऱ्यो । अन्तिम सत्य पवित्र (ईशवाणी) कुरआन तथा इस्लाम धर्म हो ।

[6]إِبْرَام को अर्थ हो संकल्प लिनु तथा पक्का गर्नु । أَمْ (बरु) بَلْ को अर्थमा छ । अर्थात् नरकका पात्रहरुले सत्यलाई अप्रिय नै ठानेनन् बरु यसका विरोधमा

أَمْ يَحْسَبُونَ أَنَّا لَا نَسْمَعُ سِرَّهُمْ وَنَجْوَىٰهُم ۚ بَلَىٰ وَرُسُلُنَا لَدَيْهِمْ يَكْتُبُونَ ﴿٨٠﴾

(८०) के उनीहरुको विचार छ कि हामी उनका गुप्त कुरालाई तथा उनको कानेखुसीलाई सुन्दैनौं । (निःसन्देह हामी निरन्तर सुनिराखेका छौं)[१] बरु हामीबाट पठाइएका उनका निकट नै लेखिराखेका छन् ।[२]

قُلْ إِن كَانَ لِلرَّحْمَٰنِ وَلَدٌ فَأَنَا أَوَّلُ الْعَابِدِينَ ﴿٨١﴾

(८१) (तपाईं) भनिदिनुस् कि यदि यो मानिहालियो कि (रहमान-अल्लाहको) सन्तान छ त म सर्वप्रथम इबादत गर्नेवाला हुन्थें ।[३]

سُبْحَٰنَ رَبِّ السَّمَٰوَٰتِ وَالْأَرْضِ رَبِّ الْعَرْشِ عَمَّا يَصِفُونَ ﴿٨٢﴾

(८२) आकाशहरु एवं धर्ती तथा अर्श (सिंहासन) को प्रभु, जे-जति (यिनीहरु) भन्दछन् त्यसभन्दा (अत्यन्त) पवित्र छ ।[४]

---

सुनियोजित उपायहरु तथा षड्यन्त्र रच्दैरहे, जसका मुक़ाबिलामा हामीले पनि उपायहरु गऱ्यौं तथा हाम्रोभन्दा दृढ उपाय कसको हुनसक्छ ? यसै अर्थमा यो आयत छ ।

﴿أَمْ يُرِيدُونَ كَيْدًا ۖ فَالَّذِينَ كَفَرُوا هُمُ الْمَكِيدُونَ﴾

"के यिनीहरु कुनै छल गर्न चाहन्छन् ? त विश्वास गर्नुस् कि धोखा खाएका काफ़िर नै हुन् ।" (सूरः अत्तूर-४२)

[१]अर्थात् गुप्त कुरा जुन उनी आफ्ना मनहरुमा लुकाएर हिंड्छन् अथवा एकान्तमा विस्तारै गर्दछन् अथवा आपसमा कानेखुसीहरु गर्दछन्, के उनीहरु ठान्दछन् कि हामी त्यो सुन्दैनौं ? अर्थ यो हो कि हामी सबै सुन्दछौं तथा जान्दछौं ।

[२]निश्चय हामी सुन्दछौं । यसका अतिरिक्त, हाम्रा पठाइएका फरिश्ताहरु अलग उनका सम्पूर्ण कुरा लेख्दछन् ।

[३]किनकि म अल्लाहको आज्ञाकारी हूँ । यदि वास्तवमा त्यसको सन्तान हुन्थ्यो भने सर्वप्रथम त्यसको उपासक म हुन्थें । अभिप्राय मुश्रिकहरु (अनेकेश्वरवादीहरु) का भ्रमको खण्डन हो जो अल्लाहको सन्तान सिद्ध गर्दछन् ।

[४]यो अल्लाहको कथन हो जसमा उसले आफ्ना शुभ तथा पवित्रताको वर्णन गरेको छ अथवा रसूलको कथन हो तथा तपाईं (सल्लल्लाहु अलैहि वसल्लम) ले पनि अल्लाहको आज्ञाले यी वस्तुहरुबाट अल्लाहको स्वच्छता तथा पवित्रताको वर्णन गर्नुभएको छ जसलाई मुश्रिक अल्लाहसित सम्बन्धित गर्दथे ।

فَذَرْهُمْ يَخُوضُوا وَيَلْعَبُوا حَتَّىٰ يُلَاقُوا يَوْمَهُمُ الَّذِي يُوعَدُونَ ﴿٨٣﴾

(८३) अब तपाईं उनीहरुलाई यसै वाद-विवाद एवं खेलकूदमा छाडिदिनुस्[1] यहाँसम्मकि उनीहरुलाई त्यस दिनसँग सामना गर्न परोस्, जसका यिनी वचन दिइन्छन् ।[2]

وَهُوَ الَّذِي فِي السَّمَاءِ إِلَٰهٌ وَفِي الْأَرْضِ إِلَٰهٌ ۚ وَهُوَ الْحَكِيمُ الْعَلِيمُ ﴿٨٤﴾

(८४) तथा त्यही आकाशहरुमाथि पनि पूज्य छ तथा धर्तीमा पनि त्यही उपासनाका योग्य छ,[3] तथा त्यो बडो हिक्मत (ज्ञान) वाला एवं पूर्ण ज्ञाता छ ।

وَتَبَارَكَ الَّذِي لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا وَعِندَهُ عِلْمُ السَّاعَةِ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٨٥﴾

(८५) तथा त्यो अति शुभ अस्तित्व छ जसका पास आकाशहरु तथा धर्ती एवं उनका मध्येको राज्य छ,[4] तथा केयामतको ज्ञान पनि उसैसित छ[5] तथा उसैतिर तिमी सबै फर्काइनेछौ ।[6]

وَلَا يَمْلِكُ الَّذِينَ يَدْعُونَ

(८६) तथा जसलाई यिनीहरु अल्लाहका अतिरिक्त पुकार्दछन्, तिनीहरु सिफारिश गर्नुको अधिकार

---

[1]अर्थात् यदि उनी सन्मार्ग अपनाउँदैनन् भने उनलाई आफ्नो दशामा छाडिदिनुस् तथा संसारका खेलकूदमा लागिरहन दिनुस् । यो धम्की तथा चेतावनी हो ।

[2]उनका आँखा त्यसै दिन खुल्नेछन् जब उनका यस आचरणको परिणाम उनका सामु आउनेछ ।

[3]यो होइन कि आकाशको पूज्य कोही अरु होस् तथा धर्तीको कोही अरु, बरु जस्तो यी दुबैको रचयिता एउटै छ पूज्य पनि एउटै छ । यसैका समानार्थ यो आयत छ ।

﴿وَهُوَ اللَّهُ فِي السَّمَاوَاتِ وَفِي الْأَرْضِ يَعْلَمُ سِرَّكُمْ وَجَهْرَكُمْ وَيَعْلَمُ مَا تَكْسِبُونَ﴾

"तथा त्यही छ सत्य उपास्य आकाशहरुमा पनि तथा धर्तीमा पनि, त्यो तिम्रो गुप्त तथा प्रकट स्थितिहरुलाई पनि जान्दछ तथा तिमी जे-जति कर्म गर्दछौ त्यसलाई पनि जान्दछ ।" (अल-अन्आम-३)

[4]यस्तो अस्तित्व जसका पासमा सबै अधिकार तथा धर्ती एवं आकाशको राज्य छ, त्यसलाई सन्तानको के आवश्यकता ?

[5]जसलाई त्यसले आफ्ना समयमा व्यक्त गर्नेछ ।

[6]जहाँ त्यो प्रत्येकलाई त्यसका कर्महरुका अनुसार प्रतिकार (पुण्य तथा दण्ड) दिनेछ ।

مِن دُونِهِ الشَّفَاعَةَ إِلَّا مَن شَهِدَ بِالْحَقِّ وَهُمْ يَعْلَمُونَ ﴿٨٦﴾

राख्दैनन्,[1] हो, (सिफारिशका योग्य ती छन्) जो सत्य कुरोलाई स्वीकार गर्दछन् तथा उनीहरुलाई ज्ञान पनि छ ।[2]

وَلَئِن سَأَلْتَهُم مَّنْ خَلَقَهُمْ لَيَقُولُنَّ اللَّهُ فَأَنَّىٰ يُؤْفَكُونَ ﴿٨٧﴾

(८७) तथा यदि तपाईं उनीसित सोध्नुस् कि उनलाई कसले पैदा गरेको छ त अवश्य यो उत्तर दिनेछन् कि अल्लाहले । अनि यिनी कहाँ फर्केर जाँदैछन् ?

وَقِيلِهِ يَا رَبِّ إِنَّ هَٰؤُلَاءِ قَوْمٌ لَّا يُؤْمِنُونَ ﴿٨٨﴾

(८८) तथा उनको (पैग़म्बरहरुको अधिकार) यो भन्नु कि[3] हे मेरा प्रभु ! निःसन्देह त्यसता मानिस हुन् जो ईमान स्वीकार गर्दैनन् ।

فَاصْفَحْ عَنْهُمْ وَقُلْ سَلَامٌ ۚ فَسَوْفَ يَعْلَمُونَ ﴿٨٩﴾

(८९) त तपाईं उनीबाट मुख फर्काइहाल्नुस् तथा (बिदाईको) सलाम भनिदिनुस् ।[4] उनीहरुलाई (स्वयं नै) शीघ्र ज्ञात भइहाल्नेछ ।

[1]अर्थात् संसारमा यिनी जुन मूर्तिहरुको पूजा गर्दछन् यस भ्रममा कि यिनी अल्लाहका समक्ष हाम्रो अभिस्तवना (सिफारिश) गर्नेछन्, ती उपास्यहरुलाई सिफारिशको सर्वथा कुनै अधिकार हुनेछैन ।

[2]सत्य कुरासित तात्पर्य धर्म-सूत्र 'ला इलाहा इल्लल्लाह' हो तथा यो स्वीकार सुझ-बुझको आधारमा होस्, केवल रीति-रिवाज एवं पूर्वजहरुको प्रथाका रुपमा नहोस्, अर्थात मुखले कलमाको उच्चारण गर्नेलाई थाहा होस् कि यसमा केवल एक अल्लाहको स्वीकार तथा अन्य सबै उपास्यहरुको इन्कार छ, अनि तदानुसार कर्म होस् । यस्ता मानिसहरुका पक्षमा सिफारिश गर्नेको सिफारिश लाभदायक हुनेछ । अथवा यो अभिप्राय हो कि सिफारिश गर्नुको अधिकार मात्र यस्ता मानिसहरुलाई प्राप्त हुनेछ जो सत्यलाई स्वीकार गर्नेहरु हुन्छन्, जस्तै अम्बिया, धर्मात्मा तथा फरिश्ताहरु, न कि झूठा उपास्यहरुले जसलाई अनेकेश्वरवादी (मुशरिक) आफ्नो सिफारिशी ठान्दछन् ।

[3] قِيله و को सम्बन्ध وعنده عِلْم الساعة सित छ अर्थात وَعِلْمُ قيله अल्लाहका पास नै केयामत (प्रलय) तथा आफ्ना पैग़म्बरको शिकायतको ज्ञान छ ।

[4]यो सलाम वियोगवाची हो, जस्तै قَالُوا سلما (अल-फुरक़ान-६३) मा छ । अर्थात् धर्मका मामिलामा मेरो तथा तिम्रो मार्ग अलग-अलग छ, यदि तिमी रोकिन्नौं भने आफ्नो काम गर्दैजाउ म आफ्नो काम गरिराखेको छु, शीघ्र नै ज्ञात भइहाल्नेछ कि सच्चा को छ तथा झूठा को ?

## सूरतुद दुख़ान-४४

سُوْرَةُ الدُّخَانِ

सूरः दुख़ान मक्कामा अवतरित भएको तथा यसमा उनान्साठी आयतहरु एवं तीन रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

حٰمٓ ﴿١﴾

(१) हा.मीम. ।

وَالْكِتٰبِ الْمُبِيْنِ ﴿٢﴾

(२) सौगन्ध छ यस खुल्ला किताबको ।

اِنَّآ اَنْزَلْنٰهُ فِيْ لَيْلَةٍ مُّبٰرَكَةٍ

(३) निश्चय हामीले यसलाई शुभ रात्रि[1] मा अवतरित गरेका छौं । निःसन्देह हामी सावधान

[1]शुभरात्रिसित अभिप्राय लैलतुल क़द्र हो, जस्तो कि अर्को स्थानमा वर्णित छ ﴿اِنَّآ اَنْزَلْنٰهُ فِيْ لَيْلَةِ الْقَدْرِ﴾ (सूरतुल क़द्र) "हामीले यो कुर्आन शबेक़द्रमा अवतरित गऱ्यौं ।" यो शुभरात्रि रमज़ानका अन्तिम दहे (दस रात्रि) को विषम रात्रिहरुमा कुनै एउटा रात हुन्छ । यहाँ क़द्र (सम्मान) को यस रात्रिलाई शुभ रात भनिएको छ । यसको शुभ हुने कुरोमा के सन्देह हुनसक्छ । एक त यसमा कुर्आनको अवतरण भयो । दोस्रो, यसमा फरिश्ताहरु तथा जिब्रीलको अवतरण हुन्छ । तेस्रो, यसमा सम्पूर्ण वर्ष हुनेवाला विषयको निर्णय गरिन्छ (जस्तो कि अगाडी आइराखेको छ) । चौथो, यस रातको इबादत (उपासना) हजार महिना (अर्थात् ८३ वर्ष ४ महिना) को उपासनाभन्दा उत्तम छ । शबेक़द्र अथवा "लैलये मुबारकह" मा कुर्आनका अवतरणको अभिप्राय यो हो कि यस राति नबी सल्लल्लाहु अलैहि वसल्लममाथि पवित्र कुर्आन अवतरित हुने प्रारम्भ भयो अथवा यो अभिप्राय हो कि लौहे महफ़ूज (सुरक्षित पट्टिका) बाट यसै राति बैतुल इज्जत (सम्मान गृह) मा अवतरित गरियो जो संसारका आकाशमा छ । अनि त्यहाँबाट आवश्यकता अनुसार २३ वर्षसम्म विभिन्न समयमा नबी सल्लल्लाहु अलैहि वसल्लममाथि अवतरित हुँदै गऱ्यो । केही विद्वानहरुले लैलये मुबारकहसित शाबान महीनाको पन्ध्रवी रात तात्पर्य लिएका छन्, किन्तु यो सही छैन । जब कुर्आनका खल्ला शब्दहरुबाट कुर्आनको शबेक़द्रमा अवतरण हुनु सिद्ध छ त यसबाट शब "शबेबराअत" तात्पर्य लिनु कदापि सही छैन । यसका अतिरिक्त, "शबेबराअत (शाबान महीनाको पन्ध्रवी रात) का सम्बन्धमा जति रिवायतहरु (वर्णन) छन् जसमा त्यसमा महत्ताको वर्णन छ । अथवा उनमा त्यसलाई निर्णयको रात भनिएको छ, यो सबै वर्णन प्रमाणका आधारमा क्षीण छन् । यिनी कुर्आनका खुला शब्दहरुको मुक़ाबिला कसरी गर्न सक्छन् ?

إِنَّا كُنَّا مُنذِرِينَ ③

गरिदिनेवाला हौं ।[1]

فِيهَا يُفْرَقُ كُلُّ أَمْرٍ حَكِيمٍ ④

(४) त्यसै रात्रिमा प्रत्येक सुदृढ कामको निर्णय गरिन्छ ।[2]

أَمْرًا مِّنْ عِندِنَا ۚ إِنَّا كُنَّا مُرْسِلِينَ ⑤

(५) हाम्रो पासबाट भएर,[3] हामी नै हौं रसूल बनाएर पठाउनेवाला ।

رَحْمَةً مِّن رَّبِّكَ ۚ إِنَّهُ هُوَ السَّمِيعُ الْعَلِيمُ ⑥

(६) तपाईंका प्रभुको कृपाले ।[4] त्यही हो सुन्ने तथा जान्नेवाला ।

رَبِّ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا ۖ إِن كُنتُم مُّوقِنِينَ ⑦

(७) जो प्रभु हो आकाशहरु तथा धर्तीको एवं जे-जति उनका मध्ये छ, यदि तिमी विश्वास गर्नेवाला हौ ।

لَا إِلَٰهَ إِلَّا هُوَ يُحْيِي وَيُمِيتُ ۖ رَبُّكُمْ وَرَبُّ آبَائِكُمُ الْأَوَّلِينَ ⑧

(८) कोही पूजा गरिने योग्य छैन त्यसका अतिरिक्त, त्यही जीवित गर्दछ तथा मार्दछ, त्यही तिम्रो प्रभु हो तथा तिम्रा पछिल्ला पूर्वजहरुको ।[5]

---

[1] कुर्आनका अवतरणको उद्देश्य मानिसहरुलाई धार्मिक लाभ तथा हानिसित अवगत गराउनु हो ताकि उनीमाथि तर्क स्थापित हुन जाओस् ।

[2] يُفْرَقُ को अर्थ يُفَصَّلُ و يُبَيَّنُ निर्णय गरिदिइन्छ तथा सम्बन्धित फरिश्ताहरुलाई सुम्पिदिइन्छ । حَكِيمٍ तत्वदर्शितापूर्ण कि अल्लाहका प्रत्येक काम हिक्मत (ज्ञान) ले पूर्ण हुन्छ, अथवा مُحْكَم का अर्थमा (सुदृढ सुनियोजित) जसमा फेरबदल सम्भव छैन । सहाबा तथा ताबेईनसित यसको व्याख्यामा भनिएको छ कि यस रात्रिमा आगामी वर्षका सन्दर्भमा मृत्यु-जीवन तथा जीवन साधनका निर्णय लौहे महफ़ूज़बाट उतारेर फरिश्ताहरुका सुपुर्द गरिन्छन् । (इब्ने कसीर)

[3] अर्थात् सम्पूर्ण निर्णय हाम्रा आदेश एवं आज्ञा तथा हाम्रा भाग्यलेख एवं इच्छाले हुन्छन् ।

[4] अर्थात् धर्मशास्त्र अवतरित गर्नुका साथ पैग़म्बरहरुलाई पठाउनु, यो पनि हाम्रो दयाकै एक अंश हो ताकि उनी हामीबाट अवतरित गरिएका किताबहरुको व्याख्या गरून् तथा हाम्रा आदेश मानिसहरुसम्म पुऱ्याऊन् । यसप्रकार भौतिक आवश्यकताहरु पूरा गर्नाका साथ हामीले आफ्नो दयाबाट मानिसहरुको आध्यात्मिक माँगहरुको पूर्तिको पनि साधन उपलब्ध गराइदियौं ।

[5] यी आयतहरु पनि सूर: आराफ़को आयत १५८ का समान छन् ।

بَلْ هُمْ فِيْ شَكٍّ يَّلْعَبُوْنَ ⑨

(९) बरु उनीहरु सन्देहमा परी खेलिराखेका छन् ।[1]

فَارْتَقِبْ يَوْمَ تَأْتِي السَّمَآءُ بِدُخَانٍ مُّبِيْنٍ ⑩

(१०) तपाईं त्यस दिनको प्रतीक्षामा रहनुस् जबकि आकाशले प्रत्येक्ष धूँवा ल्याउनेछ ।[2]

يَّغْشَى النَّاسَ ۭ هٰذَا عَذَابٌ اَلِيْمٌ ⑪

(११) जसले मानिसहरुलाई घेरिहाल्नेछ, यो दुखदायी प्रकोप हो ।

رَبَّنَا اكْشِفْ عَنَّا الْعَذَابَ اِنَّا مُؤْمِنُوْنَ ⑫

(१२) (भन्नेछन् कि) हे हाम्रा प्रभु ! यो प्रकोप हामीबाट हटाइदिनुस् हामी ईमान स्वीकार गर्दछौं ।[3]

اَنّٰى لَهُمُ الذِّكْرٰى وَقَدْ جَآءَهُمْ رَسُوْلٌ مُّبِيْنٌ ⑬

(१३) उनका लागि शिक्षा कहाँ छ ? स्पष्टरुपले वर्णन गर्नेवाला पैग़म्बर उनका पासमा आइसके ।

---

[1]अर्थात् सत्य तथा त्यसका प्रमाण त्यसका सामु आइहाले किन्तु उनी त्यसमाथि ईमान स्वीकार गर्नुका साटो सन्देहमा ग्रस्त छन् तथा यस शंकाका साथ खेलकूद तथा उपहासमा परेका छन् ।

[2]यो ती काफ़िरहरुका लागि धम्की हो कि ठीक छ तपाईं त्यस दिनको प्रतीक्षा गर्नुस् जब आकाशमाथि धूवाँ प्रकट हुनेछ। यसका अवतरणका कारण क्रममा भनिएको छ कि मक्कावासीहरुको विरोधी आचरणबाट हैरान भएर नबी सल्लल्लाहु अलैहि वसल्लमले उनका लागि अकालको श्राप दिनुभयो । जसका कारण अकालको प्रकोप आयो यहाँसम्मकि उनीहरु हाड, छाला तथा मूर्दाहरुसम्म खान बाध्य भइहाले । आकाशतिर हेर्दथे त उनलाई भोक तथा दूर्बलताका कारण धूँवा देखिन्थ्यो । अन्ततः उनी व्याकुल भएर तपाईंका निकट आए तथा प्रकोप हटाउनमा ईमान स्वीकार गर्नुको वचन दिए, किन्तु त्यसका पश्चात उनको कुफ्र तथा विरोध त्यसैप्रकार फर्किआयो । त्यस पश्चात बद्रका रणमा उनको कडा पकड गरियो । (सहीह बुख़ारी, किताबुत्तफ़सीर) केही विद्वानहरु भन्छन् कि केयामतका निकटका दस ठूला लक्षणहरुमा एउटा धूँवा पनि हो जसको प्रभाव काफ़िरमाथि अधिक तथा मोमिनमाथि निकै कम हुनेछ। आयतमा त्यसै धूँवाको चर्चा छ यस व्याख्याका अनुसार यो लक्षण केयामतका निकट उत्पन्न हुनेछ जबकि प्रथम व्याख्याका अनुसार यो प्रकट भइसक्यो । इमाम शौकानी भन्नुहुन्छ दुबै कुरा आफ्ना स्थानमा सही छन् । यसका अवतरणका विशेषताका अनुसार यो घटना घटिसकेको छ जो सही प्रमाणबाट सिद्ध छ । तैपनि केयामतका लक्षणहरुमा यसको चर्चा पनि सहीह हदीसहरुमा आएको छ । यसकारण त्यो पनि यसका विपरीत छैन, त्यसबेला पनि यो प्रकट हुनेछ । (सहीह बुख़ारी किताबुत तफ़सीर)

[3]प्रथम व्याख्याका अनुसार यो मक्काका काफ़िरहरुले भने तथा दोस्रो व्याख्याका अनुसार केयामतका निकट काफ़िरहरुले भन्नेछन् ।

ثُمَّ تَوَلَّوْا عَنْهُ وَقَالُوا مُعَلَّمٌ مَّجْنُونٌ ﴿١٤﴾

(१४) तैपनि उनीहरुले उनीबाट मुख फर्काए तथा भनिदिए कि यो सिकाए-पढाएको दिवाना हो ।

إِنَّا كَاشِفُوا الْعَذَابِ قَلِيلًا إِنَّكُمْ عَائِدُونَ ﴿١٥﴾

(१५) हामीले यातनालाई अलि हटाइदिनेछौं त तिमी फेरि आफ्नो त्यसै अवस्थामा आइहाल्नेछौ ।

يَوْمَ نَبْطِشُ الْبَطْشَةَ الْكُبْرَىٰ إِنَّا مُنتَقِمُونَ ﴿١٦﴾

(१६) जुन दिन हामीले अत्यन्त कडा गरी समात्नेछौं ।[1] निश्चित रुपले हामी बदला लिनेवाला छौं ।

وَلَقَدْ فَتَنَّا قَبْلَهُمْ قَوْمَ فِرْعَوْنَ وَجَاءَهُمْ رَسُولٌ كَرِيمٌ ﴿١٧﴾

(१७) तथा निःसन्देह हामी यसभन्दा पूर्व फिरऔनको जातिको (पनि) परीक्षा लिइसकेका छौं,[2] जसका पासमा (अल्लाहको) सम्मानित रसूल आयो ।

أَنْ أَدُّوا إِلَيَّ عِبَادَ اللَّهِ ۖ إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٨﴾

(१८) कि अल्लाह (तआ़ला) का दासहरुलाई मलाई दिदेउ,[3] विश्वास गर कि म तिम्रा लागि ईमान्दार हूँ ।[4]

وَأَن لَّا تَعْلُوا عَلَى اللَّهِ ۖ إِنِّي

(१९) तथा तिमी अल्लाह तआ़लाका समक्ष



[1]यसबाट तात्पर्य बद्रका रणको पकड हो, जसमा सत्तरी काफ़िर मारिए तथा सत्तरी बन्दी बनाइए। दोस्रो व्याख्याका अनुसार यो कडा पकड केयामत (प्रलय) का दिन हुनेछ। इमाम शौकानी भन्नुहुन्छ कि यो त्यस पकडको विशेष चर्चा हो जो बद्रका रणमा भयो, किनकि कुरैशकै प्रकरणमा यसको चर्चा छ। यद्यपि केयामतका दिन पनि अल्लाह तआ़ला कडा पकड गर्नेछ, तैपनि त्यो पकड सामान्य हुनेछ जसमा प्रत्येक दूराचारी सम्मिलित हुनेछ।

[2]परीक्षा लिनुको अर्थ हो कि हामीले उनीहरुलाई सांसारिक सुख-सुविधा तथा सम्पन्नता दियौं तथा तत्पश्चात आफ्नो महामान्य पैग़म्बर पनि उनीतिर पठायौं, किन्तु न उनले प्रभुका वरदानहरुको कृतज्ञता व्यक्त गरे न पैग़म्बरमाथि ईमान स्वीकार गरे ।

[3]عِبَادَ اللَّهِ (अल्लाहका भक्तहरु) सित अभिप्राय यहाँ मूसा अलैहिस्सलामको जाति इस्राईलको सन्तान हो, जसलाई फ़िरऔनले दास बनाइराखेको थियो । आदरणीय मूसा अलैहिस्सलामले आफ्नो जातिको स्वाधीनताको माँग गरे ।

[4]अल्लाहको आदेश (सन्देश) पुऱ्याउनमा अमानतदार हूँ ।

اٰتِيْكُمْ بِسُلْطٰنٍ مُّبِيْنٍ ﴿١٩﴾

उद्दण्डता नदेखाउ,[१] म तिम्रो सामु खुल्ला प्रमाण ल्याउनेवाला हूँ ।[२]

وَاِنِّيْ عُذْتُ بِرَبِّيْ وَرَبِّكُمْ اَنْ تَرْجُمُوْنِ ﴿٢٠﴾

(२०) तथा म आफ्ना एवं तिम्रा प्रभुको शरणमा आउँछु यसबाट कि तिमी मलाई पत्थरहरुले मारिहाल ।[३]

وَاِنْ لَّمْ تُؤْمِنُوْا لِيْ فَاعْتَزِلُوْنِ ﴿٢١﴾

(२१) तथा यदि तिमी ममाथि ईमान स्वीकार गर्दैनौ भने मबाट अलग्ग नै रह ।[४]

فَدَعَا رَبَّهٗٓ اَنَّ هٰٓؤُلَآءِ قَوْمٌ مُّجْرِمُوْنَ ﴿٢٢﴾

(२२) अनि उनले आफ्ना प्रभुसित प्रार्थना गरे कि यी सबै पापीहरु हुन् ।[५]

فَاَسْرِ بِعِبَادِيْ لَيْلًا اِنَّكُمْ مُّتَّبَعُوْنَ ﴿٢٣﴾

(२३) हामीले भनिदियौं कि राता-रात तिमी मेरा भक्तहरुलाई लिएर निस्क । निःसन्देह तिम्रो[६] पिछा गरिनेछ ।

وَاتْرُكِ الْبَحْرَ رَهْوًا ۭ اِنَّهُمْ جُنْدٌ مُّغْرَقُوْنَ ﴿٢٤﴾

(२४) तथा तिमी सागरलाई स्थिर छोडेर गइहाल,[७] निःसन्देह यो सेना डुबाइनेछ ।

---

[१]अर्थात् त्यसका रसूलका आज्ञा-पालनको इन्कार गरेर अल्लाहका सामु आफ्ना बडाई तथा उद्दण्डताको प्रदर्शन नगर ।

[२]त्यो आफ्नो पूर्वका कारण छ कि म यस्तो खुल्ला प्रमाण साथमा ल्याएको छु जसको इन्कारको अवसर नै छैन ।

[३]यस आमन्त्रण तथा धर्म-प्रचारका उत्तरमा फ़िरऔनले मूसा अलैहिस्सलामलाई हत्या गरिदिनुको धम्की दियो, जसपश्चात उनले आफ्ना प्रभुको शरण माँगे ।

[४]यदि ममाथि ईमान स्वीकार गर्दैनौ भने नगर किन्तु मेरो हत्या गर्नु अथवा दुख दिनुको प्रयास नगर ।

[५]जब उनले देखे कि आमन्त्रणको प्रभाव स्वीकार गर्नुको साटो त्यसको कुफ्र (इन्कार) तथा विरोध अधिक बढिहाल्यो त अल्लाहका अगाडी प्रार्थनाका लागि हात फैलाउनु भयो ।

[६]अल्लाहले प्रार्थना स्वीकार गऱ्यो तथा उनलाई आदेश दियो कि इस्राईलको सन्तानलाई लिएर यहाँबाट राताराात निस्केर गईहाल तथा हेर नआत्तिनु, तिम्रो पिछा पनि हुनेछ ।

[७]رَهْــوًا स्थिर अथवा शुष्क । अभिप्राय यो हो कि तिमीले लाठी हान्नुबाट सागर चमत्कारिक रुपले स्थिर तथा शुष्क भइहाल्नेछ तथा त्यसमा मार्ग बन्नेछ ।

كَمْ تَرَكُوا۟ مِن جَنَّٰتٍ وَعُيُونٍ ﴿٢٥﴾

(२५) उनीहरु धेरै बगैंचा[1] तथा जलस्रोत छाडेर गए ।

وَزُرُوعٍ وَمَقَامٍ كَرِيمٍ ﴿٢٦﴾

(२६) तथा खेतीहरु एवं आरामदायक आवास ।

وَنَعْمَةٍ كَانُوا۟ فِيهَا فَٰكِهِينَ ﴿٢٧﴾

(२७) तथा उनीहरु सुखदायी वस्तुहरु जसमा सुख भोगिरहेका थिए ।

كَذَٰلِكَ ۖ وَأَوْرَثْنَٰهَا قَوْمًا ءَاخَرِينَ ﴿٢٨﴾

(२८) यसैप्रकार भयो ।[2] तथा हामीले ती सबैको उत्तराधिकारी अन्य समुदायलाई बनाइदियौं ।[3]

فَمَا بَكَتْ عَلَيْهِمُ ٱلسَّمَآءُ وَٱلْأَرْضُ وَمَا كَانُوا۟ مُنظَرِينَ ﴿٢٩﴾

(२९) त उनीमाथि न त आकाश एवं धर्ती रोए[4] तथा न उनीहरुलाई अवसर प्राप्त दियौं ।

وَلَقَدْ نَجَّيْنَا بَنِىٓ إِسْرَٰٓءِيلَ مِنَ ٱلْعَذَابِ ٱلْمُهِينِ ﴿٣٠﴾

(३०) तथा हामीले (नै) इस्राईलको सन्तानलाई (अति) अपमानित दण्डबाट मुक्ति दियौं ।

مِن فِرْعَوْنَ ۚ إِنَّهُۥ كَانَ عَالِيًا مِّنَ ٱلْمُسْرِفِينَ ﴿٣١﴾

(३१) (जो) फ़िरऔनको तर्फबाट (भइराखेको) थियो । वास्तवमा त्यो उद्दण्ड एवं सीमा उल्लंघन गर्नेहरुमध्ये थियो ।

तिमीले सागर पार गरी त्यसलाई त्यसै स्थितिमा छाडिदिनु ताकि फ़िरऔन तथा त्यसको सेना पनि सागर पार गर्नका लागि सागरमा प्रवेश गरोस् तथा हामीले त्यसलाई जलमग्न गरिदियौं । अत: यस्तै भयो जस्तो कि वर्णन भइसकेको छ ।

[1] كَمْ विधेयवाची हो जो अधिकताको लाभ (अर्थ) दिन्छ। नील नदीका दुबै तर्फ बगैंचाहरु तथा खेतीको अधिकता थियो भव्य भवन तथा सम्पन्नताका प्रतीक थिए । सबैथोक यही संसारमा रहन गयो तथा शिक्षाका लागि केवल फ़िरऔन तथा त्यसको जातिको नाम शेष रहयो ।

[2] अर्थात् यो मामिला यसैप्रकार भयो कि जस्तो वर्णित गरिएको छ ।

[3] केही ज्ञाताहरुका निकट यसबाट तात्पर्य इस्राईलका सन्तान हुन् । किन्तु केही अन्य ज्ञाताहरुको विचारमा इस्राईली वंशको पुन: मिश्र आउनु ऐतिहासिक रुपले सिद्ध छैन । यसकारण मिश्र देशको उत्तराधिकारी कोही अन्य जाति बन्यो, इस्राईलको सन्तान होइन ।

[4] अर्थात् यी फ़िरऔनीहरुका पुण्य कर्म छँदै थिएन जो आकाशमा उक्लन्थे तथा उनका कर्मका टुट्न (विनाश हुनु) मा आकाश रुन्थे । न धर्तीमा नै उनी अल्लाहको इबादत गर्दथे कि उनीबाट बञ्चित हुनुमा धर्ती रुन्थ्यो । अभिप्राय यो हो कि आकाश तथा धर्तीमध्ये कुनै उनका विनाशमाथि रुनेवाला थिएन । (फ़तहुल क़दीर)

وَلَقَدِ اخْتَرْنٰهُمْ عَلٰى عِلْمٍ عَلَى الْعٰلَمِيْنَ ﴿٣٢﴾

(३२) तथा हामीले जानी-जानी इस्राईलको सन्तानलाई सागरवालाहरुमाथि श्रेष्ठता प्रदान गर्‍यौं ।[1]

وَ اٰتَيْنٰهُمْ مِّنَ الْاٰيٰتِ مَا فِيْهِ بَلٰٓؤٌا مُّبِيْنٌ ﴿٣٣﴾

(३३) तथा हामीले उनीहरुलाई यस्ता निशानी प्रदान गर्‍यौं जसमा खुला परीक्षा थियो ।[2]

اِنَّ هٰٓؤُلَآءِ لَيَقُوْلُوْنَ ﴿٣٤﴾

(३४) यिनीहरु त यही[3] भन्दछन् ।

اِنْ هِيَ اِلَّا مَوْتَتُنَا الْاُوْلٰى وَمَا نَحْنُ بِمُنْشَرِيْنَ ﴿٣٥﴾

(३५) कि (अन्तिम वस्तु) यही हाम्रो प्रथम पटक (संसारबाट) मरिजानु हो तथा हामी पुनः[4] उठाइने छैनौं ।

فَاْتُوْا بِاٰبَآئِنَآ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٣٦﴾

(३६) यदि तिमी साँचो हौ भने हाम्रा पूर्वजहरुलाई ल्याउ ।[5]

[1]यस जगतसित अभिप्राय इस्राईलको सन्तानका युगको जगत हो । सामान्यतः सारा जगत छैन, किनकि पवित्र कुरआनमा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमका सम्प्रदायलाई كُنتُمْ خَيْرَ أُمَّةٍ को उपाधिले सम्मानित गरिएको छ । अर्थात् इस्राईलको सन्तान आफ्ना युगमा जगतवासीहरुमाथि प्रधानता राख्दथ्यो । उनको यो प्रधानता त्यस योग्यताका कारण थियो जसलाई अल्लाह नै जान्दछ ।

[2]आयतसित अभिप्राय त्यो चमत्कार हो जो आदरणीय मूसालाई प्रदान गरिएका थिए । उनमा परीक्षाको पक्ष यो थियो कि अल्लाह तआ़ला देखोस् कि उनी कस्ता कर्म गर्दछन् ? अथवा आयतसित अभिप्राय ती अनुग्रह हुन् जो अल्लाहले उनीमाथि गरे, जस्तै फ़िरऔनीहरुलाई डुबाएर उनलाई मुक्त गर्नु, उनका लागि सागरलाई च्यातेर मार्ग बनाउनु, बादलहरुलाई छायाँ तथा मन्न-सलवा उतार्नु आदि । यसमा परीक्षा यो हो कि यी अनुग्रहका प्रतिफल स्वरुप यो जाति अल्लाहका आज्ञा-पालनको मार्ग अपनाउँछ अथवा त्यसको कृतघ्नता गर्दै उपद्रव तथा उद्दण्डताको मार्ग अपनाउँछ ।

[3]यो संकेत मक्काका काफ़िरहरुतिर छ, त्यसकारण कि वाक्यक्रम उनैसित सम्बन्धित छ । मध्यमा फ़िरऔनको कथा उनको चेतावनी स्वरुप वर्णन गरिएको छ कि फ़िरऔनले पनि उनको जस्तै कुफ़्रमा दुराग्रह गरेको थियो । यदि यिनी पनि आफ्ना कुफ़्र (इन्कार) तथा शिर्कमा अडिग रहे भने उनको परिणाम पनि फ़िरऔन तथा त्यसका अनुगामीहरुभन्दा भिन्न हुनेछैन ।

[4]अर्थात् सांसारिक जीवन नै बस अन्तिम जीवन हो । यसका पश्चात पुनः जीवित हुनु तथा हिसाब किताब हुनु सम्भव छैन ।

[5]यो नबी सल्लल्लाहु अलैहि व सल्लमलाई तथा मुसलमानहरुलाई काफ़िरहरुतिरबाट भनिँदैछ कि तिम्रो यो विश्वास वास्तवमा सही छ कि पुनर्जीवन छ त हाम्रा बाबु बाजेलाई

أَهُمْ خَيْرٌ أَمْ قَوْمُ تُبَّعٍ وَالَّذِينَ مِن قَبْلِهِمْ أَهْلَكْنَاهُمْ إِنَّهُمْ كَانُوا مُجْرِمِينَ ﴿٣٧﴾

(३७) यिनीहरु श्रेष्ठ छन् अथवा तुब्बअका समुदायका मानिस तथा जो उनीभन्दा पनि पूर्व थिए ? हामीले ती सबैलाई नष्ट गरिदियौं, निःसन्देह उनी पापी थिए ।[1]

وَمَا خَلَقْنَا السَّمَاوَاتِ وَالْأَرْضَ وَمَا بَيْنَهُمَا لَاعِبِينَ ﴿٣٨﴾

(३८) तथा हामीले धर्ती तथा आकाशहरु एवं उनका मध्येका वस्तुहरुलाई खेलका रुपमा उत्पन्न गरेनौं ।[2]

مَا خَلَقْنَاهُمَا إِلَّا بِالْحَقِّ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٣٩﴾

(३९) बरु हामीले उनीहरुलाई सही युक्तिका साथ नै पैदा गरेका छौं,[3] परन्तु अधिकतर मानिस जान्दैनन् ।[4]

---

जीवित गरेर देखाउ । यो उनको विवाद तथा कटुबहसी थियो, किनकि पुनर्जीवनको विश्वास प्रलयसित सम्बन्धित छ, न कि केयामतभन्दा पहिला नै संसारमा जीवित हुनु अथवा गरिदिनु ।

[1]अर्थात् यी मक्काका काफ़िर तुब्बअ् तथा उनीभन्दा पहिलेका जातिहरु आद तथा समूद आदिभन्दा शक्तिशाली तथा उत्तम छन् । जब हामीले उनलाई पापहरुका परिणाम स्वरुप उनीभन्दा अधिक शक्ति तथा बल राख्नुमा पनि नाश गरिदियौं त यिनी के महत्व राख्दछन् ? तुब्बअ्सित अभिप्राय सबाको जाति हो । सबामा हिम्यर जाति थियो । यी आफ्ना राजालाई तुब्बअ भन्थे । जस्तै रुमका राजालाई कैसर, ईरानका राजालाई किसरा, मिश्रका राजालाई फ़िरऔन तथा हब्शाका अधिपतिलाई नजाशी भनिन्थ्यो । इतिहासकारहरुको सहमति छ कि केही तुब्बअ्लाई बडो उन्नति प्राप्त भयो यहाँसम्मकि केही इतिहासकारहरुले भनिदिए कि त्यो देशहरुलाई विजय गर्दै समरकन्दसम्म पुग्यो । यसैप्रकार अरु पनि कैयन् ठूला राजा यस जातिमा गुज्रे । यो आफ्नो समयको एउटा श्रेष्ठतम् जाति थियो जो शक्ति, बल, सम्पन्नता तथा बडाईमा विशेषता राख्दथ्यो, किन्तु जब त्यस जातिले पनि पैग़म्बरहरुलाई झुठ्लायो त त्यसलाई अस्त-व्यस्त गरिदियो । (व्याख्याका लागि हेर्नुस् सूरः सबाका सम्बन्धित आयतहरु) हदीसमा एक तुब्बअका बारेमा चर्चा छ कि त्यो मुसलमान भइहालेको थियो, उसलाई अपशब्द नभन (मजमऊ ज्जवायेद ८६/८७, सहीहुल जामेअ लिल अलबानी १३१९) तैपनि उनीमध्ये अधिकांश अवज्ञाकारी नै रहे जसका कारण विनाश उनको भाग्य बन्यो ।

[2]यही विषय यसभन्दा पहिला सूरः साद-२७, सूरः अल-मोमिनून-११५, ११६, अल-हिज्र-८५ आदिमा वर्णित छ ।

[3]त्यो लक्ष्य तथा सहीह उपाय यही हो कि मानिसहरको परीक्षा गरियोस् तथा पुण्यकर्मीहरुलाई उनका सत्कर्महरुको फल तथा नराम्रालाई उनका नराम्रा कर्मको दण्ड दिइयोस् ।

[4]अर्थात् उनी यस उद्देश्यसित निश्चित तथा अचेत छन् । यसकारण अख़िरतको तयारीबाट

| | |
|---|---|
| (४०) निःसन्देह निर्णयको दिन ती सबैको निश्चित समय हो ।[1] | إِنَّ يَوْمَ الْفَصْلِ مِيقَاتُهُمْ أَجْمَعِينَ ﴿٤٠﴾ |
| (४१) त्यस दिन कोही मित्र कुनै मित्रका कुनै पनि काम आउने छैन तथा उनको सहायता गरिनेछन् ।[2] | يَوْمَ لَا يُغْنِي مَوْلًى عَن مَّوْلًى شَيْئًا وَلَا هُمْ يُنصَرُونَ ﴿٤١﴾ |
| (४२) परन्तु जसमाथि अल्लाहको दया हुनेछ, त्यो अत्यन्त शक्तिशाली एवं दया गर्नेवाला छ । | إِلَّا مَن رَّحِمَ اللَّهُ ۚ إِنَّهُ هُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿٤٢﴾ |
| (४३) निःसन्देह ज़क्कूम (कैक्टस) को वृक्ष । | إِنَّ شَجَرَتَ الزَّقُّومِ ﴿٤٣﴾ |
| (४४) पापीको भोजन हो । | طَعَامُ الْأَثِيمِ ﴿٤٤﴾ |
| (४५) जो तलछटका समान[3] छ तथा पेटमा उम्लिरहन्छ । | كَالْمُهْلِ يَغْلِي فِي الْبُطُونِ ﴿٤٥﴾ |
| (४६) तेज गरम पानी (का उम्लिनु) का समान ।[4] | كَغَلْيِ الْحَمِيمِ ﴿٤٦﴾ |
| (४७) त्यसलाई समातिहाल अनि घिसार्दै नरकका मध्येसम्म पुऱ्याउ ।[5] | خُذُوهُ فَاعْتِلُوهُ إِلَىٰ سَوَاءِ الْجَحِيمِ ﴿٤٧﴾ |
| (४८) अनि त्यसका टाउकोमाथि अत्यन्त गरम पानीको यातना बगाउ । | ثُمَّ صُبُّوا فَوْقَ رَأْسِهِ مِنْ عَذَابِ الْحَمِيمِ ﴿٤٨﴾ |



लापरवाह तथा सांसारिक मोह-मायामा लीन छन् ।

[1]अर्थात् यही त्यो मूल उद्देश्य हो जसका लागि मानिसहरुलाई पैदा गरियो तथा आकाश एवं धर्तीलाई रचिएको छ ।

[2]अर्थात् जस्तो भनियो ﴿ فَإِذَا نُفِخَ فِي الصُّورِ فَلَا أَنسَابَ بَيْنَهُمْ ﴾ (अल-मोमिनून-१०१) (अल-मआरिज १०) ﴿ وَلَا يَسْأَلُ حَمِيمٌ حَمِيمًا ﴾

[3] مُهْل 'मुहल' पग्लेको ताँबा, आगोमा पग्लिएको पदार्थ अथवा तलछट तेल आदिका अन्तमा जो माटोको जस्तो रहिरहन्छ ।

[4]त्यो ज़क्कूम (कैक्टस) को खाद्य उम्लिराखेको पानीका समान पेटमा उम्रनेछ ।

[5]यो नरकमा नियुक्त फरिश्ताहरुसित भनिनेछ । سَوَاء (सवाअ) मध्यका अर्थमा छन् ।

ذُقْ إِنَّكَ أَنتَ الْعَزِيزُ الْكَرِيمُ ﴿٤٩﴾

(४९) (उसित भनिनेछ) चाख्दै जाउ, तिमी त बडो आदर र सम्मानवाला थियौ ।[1]

إِنَّ هَٰذَا مَا كُنتُم بِهِ تَمْتَرُونَ ﴿٥٠﴾

(५०) यही त्यो वस्तु हो जसमा तिमीले सन्देह गर्ने गर्दथ्यौ ।

إِنَّ الْمُتَّقِينَ فِي مَقَامٍ أَمِينٍ ﴿٥١﴾

(५१) नि:सन्देह (अल्लाहसित) तर्सनेहरु शान्तिका स्थानमा हुनेछन् ।

فِي جَنَّاتٍ وَعُيُونٍ ﴿٥٢﴾

(५२) बगैंचा तथा जलस्रोतहरुमा ।

يَلْبَسُونَ مِن سُندُسٍ وَإِسْتَبْرَقٍ مُّتَقَابِلِينَ ﴿٥٣﴾

(५३) मसिनो तथा कोमल रेशमी वस्त्र लगाएको आमने-सामने (एक-अर्काका सामु बसेका हुनेछन् ।[2]

كَذَٰلِكَ وَزَوَّجْنَاهُم بِحُورٍ عِينٍ ﴿٥٤﴾

(५४) यो त्यसैप्रकार हो,[3] तथा हामीले ठूला-ठूला आँखा भएका अप्सराहरुसित (हूरहरुसित) उनको विवाह गरिदिनेछौं ।[4]

يَدْعُونَ فِيهَا بِكُلِّ فَاكِهَةٍ آمِنِينَ ﴿٥٥﴾

(५५) निश्चितताले त्यहाँ हरेक प्रकारका फलहरुको माँग गरिराखेका हुनेछन् ।[5]

---

[1]संसारमा त आफ्नो तवरले बडो आदर तथा सम्मानका साथ डुल्ने गर्दथे तथा ईमानवालाहरुलाई अपमानको दृष्टिले हेर्थे ।

[2]काफ़िर तथा पापीहरुका मुक़ाबिलामा ईमानवाला तथा सदाचारीहरुको स्थान भनिंदैछ, जसले आफूलाई कुफ्र, दुष्कर्म तथा पापहरुबाट बचाएर राखेका थिए । أمين (अमीन) को अर्थ हो यस्तो स्थान जहाँ उनी प्रत्येक प्रकारका भय तथा चिन्ताबाट सुरक्षित थिए ।

[3]अर्थात् متقين (संयमीहरु) का साथ निश्चय यस्तै व्यवहार हुनेछ ।

[4]حُورٌ यो حَوراء (हौराअ) को बहुवचन हो, कालो तथा श्वेत आँखाहरु । حَوراء (हौराअ) यसकारण भनिन्छ कि आँखाहरु उनको सुन्दरता तथा शोभालाई देखेर चकित भइहाल्नेछन् । عِين (ईन) बहुवचन हो عَيناء (ऐनाअ) को, मृगनयनी, जस्तो मृगका आँखा हुन्छन् । हामी पहिले नै बताइसकेका छौं कि प्रत्येक स्वर्गवासीलाई कमसेकम दुईटा हूरहरु अवश्य प्राप्त हुनेछन्, जो सौन्दर्यमा सूर्य एवं चन्द्रका समान हुनेछन् । हो, तिर्मिजीको एक हदीसबाट विदित हुन्छ जसलाई सहीह भनिएको छ कि शहीद (जो धर्मयुद्धमा मारिएको हुन्छ) लाई विशेषरुपले ७२ हूर प्राप्त हुनेछन् । (अबवाबु फज़ायेलिल जिहाद, बाबु माजाअ अय्युन्नासि अफ़ज़ल) (सहीह बुख़ारी, मुस्लिम)

[5]آمنين (निश्चिन्ततापूर्वक) को अभिप्राय छ उनको समाप्त हुने कुरोको भय हुनेछैन न

لَا يَذُوْقُوْنَ فِيْهَا الْمَوْتَ اِلَّا الْمَوْتَةَ الْاُوْلٰى ۚ وَوَقٰىهُمْ عَذَابَ الْجَحِيْمِ ﴿٥٦﴾

(५६) त्यहाँ उनीहरु मृत्युको स्वाद चाख्नेवाला हुने छैनन् प्रथम मृत्युका बाहेक (जो उनीहरु मरिसके)[1] उनीहरुलाई अल्लाह (तआ़ला) ले नरक़का दण्डबाट बचाइदियो ।

فَضْلًا مِّنْ رَّبِّكَ ۚ ذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيْمُ ﴿٥٧﴾

(५७) यो केवल तिम्रो प्रभुको कृपा हो ।[2] यही हो ठूलो सफलता ।

فَاِنَّمَا يَسَّرْنٰهُ بِلِسَانِكَ لَعَلَّهُمْ يَتَذَكَّرُوْنَ ﴿٥٨﴾

(५८) हामीले यस (क़ुर्‌आन) लाई तिम्रो भाषामा सरल गरिदियौं ताकि उनीहरु शिक्षा ग्रहण गरून् ।

فَارْتَقِبْ اِنَّهُمْ مُّرْتَقِبُوْنَ ﴿٥٩﴾

(५९) अब तिमी प्रतीक्षा गर । यिनी पनि प्रतीक्षा गरिराखेका छन् ।[3]

उनका खानाबाट रोग आदिको डर अथवा मृत्यु र थकान तथा शैतानको कुनै भय हुनेछैन ।

[1]अर्थात् संसारमा उनीहरुलाई जुन मृत्यु आएको थियो त्यसका पश्चात उनीहरुलाई मृत्युको स्वाद चाख्नुपर्ने छैन । जस्तै हदीस (अन्तिम ईशदूतका कथन) मा चर्चा छ कि मृत्युलाई एउटा भेंढा (च्याङ्ग्रा) का रुपमा नरक तथा स्वर्गका मध्ये ल्याएर वध गरिदिइनेछ तथा घोषणा गरिदिइनेछ, "हे स्वर्गवासीहरु ! तिम्रा लागि स्वर्गका जीवन स्थाई छ, अब तिम्रा लागि मृत्यु छैन । तथा हे नरक़वासीहरु ! तिम्रा लागि नरक़को यातना स्थाई छ, मृत्यु छैन ।" (सहीह बुख़ारी, तफ़सीर सूर: मरियम, मुस्लिम किताबुल जन्नह) । दोस्रो हदीसमा भन्नुभयो : हे जन्नतिहरु ! तिम्रो भाग्य अब स्वास्थ्य तथा बल छ, तिमी कहिल्यै रोगी हुनेछैनौ तिम्रा लागि अब जीवन नै जीवन छ, मृत्यु छैन । तिम्रा लागि वरदान नै वरदान छ, यसमा कमी हुनेछैन तथा सदा नवयुवक रहनेछौ, कहिल्यै बुढेसो आउने छैन । (सहीह बुख़ारी किताबुर्रिकाक़, बाबुल कस्दे वल मुदावमति अलल अमले तथा मुस्लिम उपरोक्त किताब)

[2]जुनप्रकार हदीसमा पनि छ । भन्नुभयो यो कुरा जानिहाल कि तिमीमध्ये कसैको कर्म त्यसलाई स्वर्गमा लग्ने छैन । सहाबा उहाँका (सहचरहरु) ले प्रश्न गरे, "अल्लाहका रसूल ! तपाईलाई पनि ?" भन्नुभयो, "हो मलाई पनि, परन्तु यो कि अल्लाहले मलाई आफ्नो दया तथा करुणाले छोप्नेछ ।" (सहीह बुख़ारी, किताबुर्रिकाक़, बाबुल कस्दे वल मुदावमते अलल अमल तथा मुस्लिम उपरोक्त किताब)

[3]तिमी अल्लाहका प्रकोपको प्रतिक्षा गर यदि यिनीले ईमान ल्याएनन् । यिनी प्रतिक्षा गरिराखेका छन् यस कुराको कि इस्लामका प्रभुत्व तथा लागु हुनुभन्दा पहिला नै सम्भवत: तपाईंको निधन हुनजाओस् ।

## सूरतुल जासियः-४५

سُورَةُ الجَاثِيَةِ

सूरः जासियः मक्कामा अवतरित भएको, यसमा सैंतीस आयतहरु तथा चार रूकूअ छन्।

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु एवं दयालु छ।

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

(१) हा.मीम.।

حٰمٓ ۟

(२) यो किताब अल्लाह प्रभावशाली हिक्मतवालाको तर्फबाट अवतरित भएको छ।

تَنْزِيْلُ الْكِتٰبِ مِنَ اللهِ الْعَزِيْزِ الْحَكِيْمِ ۟

(३) आकाशहरु तथा धर्तीमा ईमानवालाहरुका लागि निःसन्देह धेरै निशानीहरु छन्।

اِنَّ فِي السَّمٰوٰتِ وَالْاَرْضِ لَاٰيٰتٍ لِّلْمُؤْمِنِيْنَ ۟

(४) तथा स्वयं तिम्रा जन्ममा तथा पशुहरुलाई फैलाउनमा विश्वास राख्ने समुदायका लागि धेरै निशानीहरु छन्।

وَفِيْ خَلْقِكُمْ وَمَا يَبُثُّ مِنْ دَآبَّةٍ اٰيٰتٌ لِّقَوْمٍ يُّوْقِنُوْنَ ۟ۙ

(५) तथा रात्रि-दिनका परिवर्तनमा तथा जे-जति जीविका अल्लाह तआला आकाशबाट अवतरित गरी धर्तीलाई त्यसको मृतका पश्चात जीवित गरिदिन्छ,[1] त्यसमा तथा वायुहरुका परिवर्तनका पनि ती मानिसहरुका लागि जो बुद्धि राख्दछन्। निशानीहरु छन्।[2]

وَاخْتِلَافِ الَّيْلِ وَالنَّهَارِ وَمَآ اَنْزَلَ اللهُ مِنَ السَّمَآءِ مِنْ رِّزْقٍ فَاَحْيَا بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا وَتَصْرِيْفِ الرِّيٰحِ اٰيٰتٌ لِّقَوْمٍ يَّعْقِلُوْنَ ۟

[1]आकाश तथा धर्ती, मानव-जातिको रचना, रात-दिनको आवगमन एवं आकाशीय वर्षाद्वारा सुकेको धर्तीमा जीवनको लहरको दौड आदि, विश्व तथा प्राणहरुमा असंख्य निशानीहरु (चिन्ह) छन् जो अल्लाहको एकता तथा त्यसको प्रतिपालक हुने कुरोका प्रमाण हुन्।

[2]कहिले वायुको दिशा उत्तर एवं दक्षिणलाई, कहिले पूर्व एवं पश्चिमलाई हुन्छ, कहिले जलीय हावाहरु हुन्, कहिले थलीय वायुहरु, कहिले रातलाई, कहिले दिनलाई, केही वर्षा भएका, केही लाभदायक, केही वायुहरु आत्माको आहार तथा केही सबैलाई डढाइदिनेवाला तथा केवल धूलको तूफान। वायुका यति प्रकार पनि प्रमाणित गर्दछन् कि यस विश्वको कुनै सञ्चालक छ जो मात्र एक छ, दुई अथवा अधिक होइन। सबै अधिकारको स्वामी त्यही एक हो, तिनमा

تِلْكَ اٰيٰتُ اللّٰهِ نَتْلُوْهَا عَلَيْكَ بِالْحَقِّ ۚ فَبِاَيِّ حَدِيْثٍۭ بَعْدَ اللّٰهِ وَاٰيٰتِهٖ يُؤْمِنُوْنَ ﴿٦﴾

(६) यी हुन् अल्लाह (तआला) का आयतहरु जसलाई हामी तपाईंलाई सत्यरुपमा सुनाइराखेका छौं, त अल्लाह (तआला) तथा त्यसका आयतहरुका पश्चात यिनी कुन कुरामा ईमान स्वीकार गर्नेछन् ।[1]

وَيْلٌ لِّكُلِّ اَفَّاكٍ اَثِيْمٍ ﴿٧﴾

(७) धिक्कार (एवं खेद छ) प्रत्येक झूठा पापीमाथि ।[2]

يَّسْمَعُ اٰيٰتِ اللّٰهِ تُتْلٰى عَلَيْهِ ثُمَّ يُصِرُّ مُسْتَكْبِرًا كَاَنْ لَّمْ يَسْمَعْهَا ۚ فَبَشِّرْهُ بِعَذَابٍ اَلِيْمٍ ﴿٨﴾

(८) जो अल्लाहका आयतहरु आफ्ना सामु पढिएको सुनोस् तैपनि गर्व गर्दै यसप्रकार अडिएको होस् जस्तो कि सुन्दै सुनेन ।[3] त यस्ता मानिसहरुलाई कष्टदायी यातनाको सूचना (पुऱ्याइ) दिनुस् ।

وَاِذَا عَلِمَ مِنْ اٰيٰتِنَا شَيْئًا ۨاتَّخَذَهَا هُزُوًا ؕ اُولٰٓئِكَ لَهُمْ عَذَابٌ مُّهِيْنٌ ﴿٩﴾

(९) तथा त्यो जब हाम्रा आयतहरुमध्ये कुनै आयतको सूचना पाउँछ त त्यसको उपहास उडाउँछ,[4] यिनै मानिसहरु हुन् जसका लागि अपमानपूर्ण यातना छ ।

---

कोही उसको साझी छैन । प्रत्येक प्रकारको (नियम) त्यही चलाउन्छ, कोही अरुसँग अलिकति पनि अधिकार छैन । यसै भावार्थको आयत सूर: बक़र:को आयत नं.१६४ पनि हो ।

[1]अर्थात् अल्लाहद्वारा अवतरित गरिएको कुरआन जसमा त्यसको तौहीदका प्रमाण तथा युक्तिहरु छन् । यदि उनी त्यसप्रति पनि विश्वास गर्दैनन् भने अल्लाहका कुराका पश्चात कसको कुरा छ तथा त्यसका निशानीहरुका पश्चात कसका निशानीहरु छन्, जसप्रति उनी विश्वास गर्नेछन् ? بعد الله को अभिप्राय हो, بعد حديث الله و بعد آياته यहाँ पवित्र कुर्आनलाई हदीस भनिएको छ । जस्तै ﴿اللّٰهُ نَزَّلَ اَحْسَنَ الْحَدِيْثِ﴾ (अज़्ज़ुमर २३) मा छ ।

[2]أفاك (अफ़्फ़ाक़) كذاب को अर्थमा, أثيم (महापापी) ويل विनाश अथवा नरकको एउटा उपत्यकाको नाम ।

[3]अर्थात् कुफ्रमा अडिग रहन्छ तथा सत्यका अगाडी स्वयंलाई ठूलो ठान्दछ तथा यसै अहंकारमा सुनेकोलाई नसुनेझैं गरिदिन्छ ।

[4]अर्थात् प्रथम त त्यो कुर्आनलाई ध्यानले सुन्दै-सुन्दैन तथा यदि कुनै कुरा त्यसका कानमा पर्नजान्छ अथवा कुनै कुरा आउँछ त त्यसलाई उपहास तथा परिहासको विषय बनाइहाल्छ । आफ्नो बुद्धिहीनता तथा निर्बोधताका कारण अथवा कुफ्र तथा अवज्ञामा हठधर्मी अथवा अहंकारका कारण ।

مِنْ وَّرَآئِهِمْ جَهَنَّمُ ۚ وَلَا يُغْنِيْ عَنْهُمْ مَّا كَسَبُوْا شَيْـًٔا وَّلَا مَا اتَّخَذُوْا مِنْ دُوْنِ اللّٰهِ اَوْلِيَآءَ ۚ وَلَهُمْ عَذَابٌ عَظِيْمٌ ﴿١٠﴾

(१०) उनका पछाडी नरक छ,[१] जे-जति उनीहरुले प्राप्त गरेका थिए, त्यसले उनीहरुलाई केही पनि लाभ दिने छैन[२] तथा न उनी (केही काम आउने छन्) जसलाई उनले अल्लाहका अतिरिक्त संरक्षक (एवं कार्यक्षम) बनाएका थिए ।[३] उनका लागि त अत्यन्त ठूला यातना छ ।

هٰذَا هُدًى ۚ وَالَّذِيْنَ كَفَرُوْا بِاٰيٰتِ رَبِّهِمْ لَهُمْ عَذَابٌ مِّنْ رِّجْزٍ اَلِيْمٌ ﴿١١﴾

(११) यो (सर्वथा) मार्गदर्शन हो ।[४] तथा जसले आफ्ना प्रभुका आयतहरुलाई मानेनन् उनका लागि अत्यन्त कष्टदायी यातनाहरु छन् ।[५]

اَللّٰهُ الَّذِيْ سَخَّرَ لَكُمُ الْبَحْرَ لِتَجْرِيَ الْفُلْكُ فِيْهِ بِاَمْرِهٖ وَلِتَبْتَغُوْا مِنْ فَضْلِهٖ

(१२) अल्लाह नै हो जसले तिम्रा लागि समुद्रलाई अधीनस्थ बनाइदियो[६] ताकि त्यसका आदेशले त्यसका डुङ्गाहरु चलून् ।[७] तथा तिमी उसको कृपा

[१]अर्थात् यस्ता आचरणका मानिसहरुका लागि प्रलयका दिन नरक छ ।

[२]अर्थात् उनीहरुले संसारमा जो धन कमाएका हुनेछन्, जुन सन्तान तथा जत्थामाथि गर्व गरिरहेका हुनेछन्, ती प्रलयका दिन उनीहरुलाई कुनै लाभ दिनसक्ने छैन ।

[३]जसलाई संसारमा आफ्नो मित्र एवं सहाय तथा पूज्य बनाएका थिए, तिनीहरु त्यस दिन उसलाई देखिने छैनन्, सहायताको कुरा त के गर्ने ?

[४]अर्थात् कुरआन, किनकि त्यसको अवतरणको उद्देश्य नै यो हो कि मानिसहरुलाई कुफ्र तथा शिर्कका अँध्याराहरुबाट निकालेर ईमानका प्रकाशनामा ल्याइयोस् । यसकारण त्यसका सर्वथा मार्गदर्शन हुनुमा त कुनै सन्देह नै छैन, किन्तु मार्गदर्शन प्राप्त हुनेछ त उसैलाई जो त्यसका लागि आफ्नो वक्ष (छाति) खोलिदिनेछ ।

[५] اَلِيْمٌ यो عذابٌ को विशेषण हो । केही विद्वानहरु यसलाई رِجْز को विशेषण बताउँछन् । رِجْز को अर्थ हो कडा यातना ।

[६]अर्थात् त्यसलाई यस्तो बनाइदियो कि तिमी डुङ्गा तथा जहाजहरुद्वारा त्यसमाथि यात्रा गर्नसक ।

[७]अर्थात् समुद्रहरुमा नौका तथा जहाजहरु चल्नु, यो तिम्रो कमाल तथा सीप होइन, यो अल्लाहको आज्ञा तथा इच्छा हो । अन्यथा त्यसले चाहेको भए त समुद्रका लहरहरुलाई यति उद्दण्ड बनाइदिन्थ्यो कि कुनै डुङ्गा या जलयान त्यसको अगाडी रुक्नै सक्दैनथ्यो, जस्तो कि कहिलेकाहीं त्यो आफ्नो शक्ति देखाउनको लागि यस्तो गर्दछ । यदि स्थाईरुपले लहरहरु को दशा यही रहन्थ्यो भने तिमी कहिल्यै पनि समुद्रमा यात्रा गर्ने योग्य हुने थिएनौ ।

وَلَعَلَّكُمْ تَشْكُرُونَ ﴿١٢﴾

खोज[1] तथा ताकि तिमी त्यसको कृतज्ञता व्यक्त गर ।[2]

وَسَخَّرَ لَكُم مَّا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ جَمِيعًا مِّنْهُ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّقَوْمٍ يَتَفَكَّرُونَ ﴿١٣﴾

(१३) तथा आकाश एवं धर्तीको प्रत्येक वस्तुलाई पनि आफ्नो तर्फबाट तिम्रो अधीनस्त गरिदिएको छ ।[3] जो मानिस विचार गर्दछन्, नि:सन्देह यसमा धेरै निशानीहरु (लक्षण) पाउनेछन् ।

قُل لِّلَّذِينَ آمَنُوا يَغْفِرُوا لِلَّذِينَ لَا يَرْجُونَ أَيَّامَ اللَّهِ لِيَجْزِيَ قَوْمًا بِمَا كَانُوا يَكْسِبُونَ ﴿١٤﴾

(१४) तपाईं ईमान भएकाहरुसित भनिदिनुस् कि तिनले ती मानिसहरुलाई क्षमा गरिदिने गरून् जो अल्लाहका दिनहरुको आशा राख्दैनन्[4] ताकि अल्लाह तआला एक समुदायलाई उनका कर्तुतहरुका प्रतिफल देओस् ।[5]

---

[1]अर्थात् व्यापारद्वारा तथा त्यसमा डुबुल्की लगाएर मोती तथा अन्य पदार्थ निकालेर तथा समुद्री जन्तु (माछा आदि) को शिकार गरेर ।

[2]यो सबैथोक यसकारण गऱ्यो कि तिमी उसका उपहारहरुका लागि अल्लाहप्रति कृतज्ञता देखाउ जो यस समुद्रलाई वशमा गर्नुका कारण तिमीलाई प्राप्त हुन्छ ।

[3]वशमा गर्नुको अभिप्राय यही हो कि उनलाई तिम्रा सेवाको लागि नियुक्त गरिदिएको छ । तिम्रा हित-लाभ तथा तिम्रा जीविका सब यिनैसित सम्बन्धित छ । जस्तै चन्द्र, सूर्य, प्रकाशमान तारा, वर्षा, मेघ एवं वायु आदि हुन् । तथा आफ्नो तर्फबाट को अभिप्राय विशेष दया तथा करुणासित छ ।

[4]अर्थात् जो यस कुराको भय गर्दैनन् कि अल्लाह आफ्ना ईमान्दार भक्तहरुको सहायता गर्नु तथा शत्रुहरुको विनाश गर्नुको शक्ति राख्दछ । तात्पर्य काफ़िर हुन् । तथा أَيَّامَ اللَّهِ (अल्लाहका दिनहरुसित) अभिप्राय घटनाहरु हुन्, जस्तै ﴿وَذَكِّرْهُم بِأَيَّامِ اللَّهِ﴾ (इब्राहीम-५) मा छ । अभिप्राय हो कि ती काफ़िरहरुसित क्षमा तथा अन्देखिले काम लिउ, जो अल्लाहका प्रकोपबाट निश्चिन्त तथा निर्भय छन् । यो प्रारम्भिक आदेश थियो जो मुसलमानहरुलाई पहिला दिने गरिन्थ्यो । पछि जब मुसलमान मुक़ाबिलाका योग्य भइहाले त त्यस पश्चात कडाई तथा उनीसित टकराउनु (ज़िहाद) को आदेश दिइयो ।

[5]अर्थात् जब तिमी तिनीहरुतिरबाट दुखहरुलाई सहन तथा उनका अत्याचारहरुलाई क्षमा गर्नेछौ त यी सबै पाप उनीमाथि रहनेछन्, जसको दण्ड केयामतका दिन हामीले उनलाई दिनेछौं ।

(१५) जसले पुण्य गर्नेछ त्यो आफ्ना स्वयंका भलोका लागि तथा जो नराम्रो गर्नेछ त्यसको दुष्परिणाम उसैमाथि छ;[1] अनि तिमी सबै आफ्ना प्रभुतिर फर्काइनेछौ ।[2]

مَنْ عَمِلَ صَالِحًا فَلِنَفْسِهٖ ۚ وَمَنْ اَسَآءَ فَعَلَيْهَا ۙ ثُمَّ اِلٰى رَبِّكُمْ تُرْجَعُوْنَ ﴿١٥﴾

(१६) तथा निःसन्देह हामीले इस्राईलका सन्तानलाई किताब, राज्य[3] एवं नबूअत प्रदान गरेका थियौं, तथा हामीले उनीहरुलाई पवित्र (एवं उत्तम) जीविका प्रदान गरेका थियौं ।[4] तथा उनीहरुलाई संसारवालाहरुमाथि श्रेष्ठता प्रदान गरेका थियौं ।[5]

وَلَقَدْ اٰتَيْنَا بَنِيْٓ اِسْرَآءِيْلَ الْكِتٰبَ وَالْحُكْمَ وَالنُّبُوَّةَ وَرَزَقْنٰهُمْ مِّنَ الطَّيِّبٰتِ وَفَضَّلْنٰهُمْ عَلَى الْعٰلَمِيْنَ ﴿١٦﴾

(१७) तथा हामीले उनीहरुलाई धर्मका खुला निशानीहरु (तर्क) प्रदान गर्‍यौं,[6] अनि उनीहरुले आफ्ना निकट ज्ञान पुगिहाले पश्चात आपसका द्वेष-विवादका कारण नै मतभेद उत्पन्न गरिहाले ।[7] यिनी जुन-जुन कुराहरुमा मतभेद गरिराखेका

وَاٰتَيْنٰهُمْ بَيِّنٰتٍ مِّنَ الْاَمْرِ ۚ فَمَا اخْتَلَفُوْٓا اِلَّا مِنْۢ بَعْدِ مَا جَآءَهُمُ الْعِلْمُ ۙ بَغْيًۢا بَيْنَهُمْ ۗ اِنَّ رَبَّكَ يَقْضِيْ بَيْنَهُمْ يَوْمَ الْقِيٰمَةِ فِيْمَا

[1]अर्थात् प्रत्येक गिरोह तथा काफिरको कर्म (राम्रो-नराम्रो), त्यसको लाभ तथा हानि स्वयं कर्तालाई नै पुग्नेछ, कुनै अन्यलाई होइन । यसमा नेकीको प्रलोभन पनि छ नराम्रोबाट चेतावनी पनि ।

[2]अतः त्यसले प्रत्येकलाई त्यसका कर्मानुसार फल दिइनेछ । सत्कर्मीहरुलाई राम्रो तथा दुष्कर्मीहरुलाई नराम्रो ।

[3]किताबसित तात्पर्य धर्मग्रन्थ तौरात, حكم (हुक्म) सित राज्य तथा शासन अथवा बोध एवं निर्णयको त्यो योग्यता हो जो विवाद तथा मानिसहरुका बीच निर्णय गर्नका लागि आवश्यक छ ।

[4]ती जीविकाहरु जो उनका लागि वैध (उचित) थिए, तथा तिनैमध्ये 'मन्न' तथा 'सलवा'को अवतरण पनि थियो ।

[5]अर्थात् उनका युगमा ।

[6]कि यो वैध (हलाल) हो तथा यो अवैध (हराम) अथवा चमत्कार अभिप्राय हो, अथवा नबी सल्लल्लाहु अलैहि वसल्लमलाई नबी बनाएर पठाइनुको ज्ञान, उहाँको नबूअत (ईशदूत हुने कुरो) का प्रमाण तथा उहाँका प्रवास स्थानको निर्धारण अभिप्राय हो ।

[7]بَغْيًا بينهم को अभिप्राय हो परस्पर एक-अर्कासित ईर्ष्या एवं द्वेषको प्रदर्शन गर्दै अथवा

كَانُوْا فِيْهِ يَخْتَلِفُوْنَ ﴿١٧﴾

छन् उनको निर्णय केयामतका दिन उनकामध्ये तिम्रो प्रभुले (स्वयं) गर्नेछ ।[1]

ثُمَّ جَعَلْنٰكَ عَلٰى شَرِيْعَةٍ مِّنَ الْاَمْرِ فَاتَّبِعْهَا وَلَا تَتَّبِعْ اَهْوَآءَ الَّذِيْنَ لَا يَعْلَمُوْنَ ﴿١٨﴾

(१८) अनि हामीले तपाईलाई धर्मका (स्पष्ट) मार्गमा स्थापित गरिदियौं,[2] तसर्थ तपाई त्यसैमा लागिरहनुस् तथा अज्ञानीहरुका इच्छाको अनुगमन नगर्नुस् ।[3]

اِنَّهُمْ لَنْ يُّغْنُوْا عَنْكَ مِنَ اللّٰهِ شَيْـًٔا ؕ وَاِنَّ الظّٰلِمِيْنَ بَعْضُهُمْ اَوْلِيَآءُ بَعْضٍ ۚ وَاللّٰهُ وَلِيُّ الْمُتَّقِيْنَ ﴿١٩﴾

(१९) (याद राख्नुस्) कि यिनीहरु कदापि अल्लाहका समक्ष तपाईको कुनै काम आउन सक्दैन । (सम्भिmहाल कि) अत्याचारीहरु आपसमा एक-अर्काका साथी हुन्छन् । तथा सदाचारीहरुको साथी (संरक्षक) अल्लाह (महान) छ ।

هٰذَا بَصَآئِرُ لِلنَّاسِ وَهُدًى وَّرَحْمَةٌ لِّقَوْمٍ يُّوْقِنُوْنَ ﴿٢٠﴾

(२०) यो कुरआन मानिसहरुका लागि सुभ-बुझका कुराहरु[4] एवं मार्गदर्शन एवं कृपा हो त्यस[5] गिरोहका लागि जो विश्वास राख्दछ ।

मान-मर्यादा एवं पदका लागि । उनीहरुले ज्ञान आइहाले उपरान्त मतभेद अथवा नबी सल्लल्लाहु अलैहि वसल्लमको नबूअत (दूतत्व) बाट इन्कार गरे ।

[1]अर्थात् सत्यवादीलाई राम्रो प्रतिफल तथा मिथ्यावादीलाई नराम्रो बदला दिनेछ ।

[2] شريعت (शरीअत) को शाब्दिक अर्थ हो मार्ग, संघ एवं रीति । विशाल मार्गलाई पनि शारेअ भनिन्छ कि त्यसले उद्देश्य तथा लक्ष्यसम्म पुऱ्याउँछ । अतः यहाँ शरीअतसित तात्पर्य त्यो धर्म हो जो अल्लाहले आफ्ना भक्तहरुका लागि नियुक्त गरेको छ ताकि मानिस त्यसमा हिंडेर अल्लाहको प्रसन्नताको लक्ष्य प्राप्त गर्न सकून् । आयतको अभिप्राय हो कि हामीले तपाईलाई धर्मका एक स्पष्ट मार्ग अथवा रीतिमा स्थित गरिदिएका छौं जो तपाईलाई सत्यसम्म पुऱ्याउनेछ ।

[3]जो अल्लाहको तौहीद (अद्वैत) तथा त्यसका धर्म-विधानसित अनभिज्ञ छन् । तात्पर्य मक्काका काफ़िर तथा उनका साथी हुन् ।

[4]अर्थात् ती प्रमाणहरुको संग्रह हो जो धर्मका आदेशहरुसित सम्बन्धित छ तथा जसबाट मानव-जातिका आवश्यकताहरु संलग्न छन् ।

[5]अर्थात् संसारमा संमार्ग बताउनेवाला तथा आख़िरतमा अल्लाहको दयाको कारण छ ।

أَمْ حَسِبَ الَّذِينَ اجْتَرَحُوا السَّيِّاٰتِ أَنْ نَّجْعَلَهُمْ كَالَّذِينَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ ۙ سَوَآءً مَّحْيَاهُمْ وَمَمَاتُهُمْ ۚ سَآءَ مَا يَحْكُمُوْنَ ﴿٢١﴾

(२१) के उनीहरुको जसले नराम्रो काम गर्दछन्, यो विचार छ कि हामीले उनलाई तिनीहरुजस्तो गरिदिनेछौं जसले ईमान स्वीकार गरे तथा पुण्यका कार्य गरे कि उनको मर्नु-बाँच्नु समान भइहालोस्,[1] नराम्रो निर्णय हो जो उनीहरुले गरिराखेका छन् ।

وَخَلَقَ اللّٰهُ السَّمٰوٰتِ وَالْاَرْضَ بِالْحَقِّ وَلِتُجْزٰى كُلُّ نَفْسٍۭ بِمَا كَسَبَتْ وَهُمْ لَا يُظْلَمُوْنَ ﴿٢٢﴾

(२२) तथा आकाशहरु तथा धर्तीलाई अल्लाहले निकै न्यायका साथ पैदा गरेको छ र ताकि प्रत्येक व्यक्तिलाई त्यसले गरेका कार्यको पूरा पारिश्रमिक दिइयोस् तथा उनी अत्याचार गरिने छैनन् ।[2]

أَفَرَءَيْتَ مَنِ اتَّخَذَ إِلٰهَهُ هَوٰهُ

(२३) के तपाईंले त्यसलाई पनि देख्नुभयो जसले आफ्नो मनोकांक्षालाई आफ्नो पूज्य बनाएको छ,[3]

[1]अर्थात् लोक-परलोकमा दुवैका बीच कुनै अन्तर नगर्नुस् । यस्तो कदापि हुनसक्दैन । अथवा अभिप्राय हो कि जसरी उनी संसारमा समान थिए आखिरतमा पनि समान नै रहनेछन् कि मरेर यो पनि नास्ति त्यो पनि नास्ति, न दुराचारीलाई दण्ड, न सदाचारीलाई पुरस्कार । यस्तो हुनेछैन । यसकारण अगाडी भनियो कि उनको यो नराम्रो निर्णय हो जो उनी गरिराखेका छन् ।

[2]तथा यही न्याय हो कि कियामतका दिन अवश्य निर्णय हुनेछ तथा प्रत्येकलाई त्यसका कर्महरुका अनुसार राम्रो अथवा नराम्रो प्रतिकार प्राप्त हुनेछ । यो हुनेछैन कि राम्रा तथा नराम्रा दुवैका साथ समान व्यवहार गरोस्, जस्तो कि काफिरहरुको भ्रम छ, जसको खण्डन विगत कैयन् आयतहरुमा गरिएको छ । किनकि दुवैलाई बराबरीका स्तरमा राख्नु अन्याय तथा मान्यताहरुबाट विमुखता पनि छ । अतः जसरी काँडा छरेर अंगूरको उपज प्राप्त गर्न सकिंदैन यसैप्रकार दुष्कर्म गरेर त्यो स्थान प्राप्त हुन सक्दैन जो अल्लाहले ईमानवालाहरुका लागि राखेको छ ।

[3]अतः त्यो उसैलाई राम्रो ठान्दछ जसलाई उसको मन राम्रो तथा त्यसैलाई नराम्रो ठान्दछ जसलाई त्यसको मन नराम्रो मान्दछ । अर्थात अल्लाहका रसूलका आदेशहरुको तुलनामा आफ्नो मनोमानीलाई प्रधानता दिन्छ अथवा आफ्नो समझ (बुद्धि) लाई महत्व दिन्छ, जबकि समझ पनि वातावरणबाट प्रभावित अथवा स्वार्थको शिकार भएर मनोइच्छाको जस्तै गलत निर्णय गर्नसक्छ । एउटा अर्थ त्यसको यो गरिएको छ कि जो अल्लाहको तर्फबाट अवतरित मार्गदर्शन तथा प्रमाणका बिना आफ्ना मनको धन अप्नाउँछ । केही विद्वान भन्छन् कि यसबाट तात्पर्य यस्तो व्यक्ति हो जो पत्थरलाई पुज्दथ्यो जसलाई अधिक सुन्दर पत्थर पाउँथे भने पहिला पत्थरलाई

وَأَضَلَّهُ اللَّهُ عَلَىٰ عِلْمٍ وَخَتَمَ عَلَىٰ سَمْعِهِ وَقَلْبِهِ وَجَعَلَ عَلَىٰ بَصَرِهِ غِشَاوَةً فَمَن يَهْدِيهِ مِن بَعْدِ اللَّهِ أَفَلَا تَذَكَّرُونَ ﴿٢٣﴾

तथा सुझ-बुझका उपरान्त पनि अल्लाहले त्यसलाई पथभ्रष्ट गरिदिएको छ,[1] तथा त्यसका कान तथा हृदयमा मोहर (छाप) लगाइदिएको छ[2] तथा त्यसको आँखामा पर्दा पारिदिएको छ ?[3] अब यस्ता व्यक्तिलाई अल्लाहका पश्चात कसले मार्गदर्शन गर्नसक्छ ।[4] के अहिले पनि तिमी शिक्षा ग्रहण गर्दैनौ ?[5]

وَقَالُوا مَا هِيَ إِلَّا حَيَاتُنَا الدُّنْيَا نَمُوتُ وَنَحْيَا وَمَا يُهْلِكُنَا إِلَّا الدَّهْرُ وَمَا لَهُم بِذَٰلِكَ مِنْ عِلْمٍ إِنْ هُمْ

(२४) उनीहरुले भने कि हाम्रो जीवन केवल सांसारिक जीवन नै हो; हामी मर्दछौं तथा बाँच्छौं तथा हामीलाई केवल काल (युग) नै मारिदिन्छ ।[6] (वास्तवमा) उनीहरुलाई त्यसको केही

फ्याँकेर दोस्रोलाई उपास्य बनाइहाल्थे । (फ़तहुल क़दीर)

[1]अर्थात् ज्ञान पुग्नु तथा प्रमाणको स्थापनाको उपरान्त त्यो कुकर्मलाई नै अप्नाउँछ जस्तै धेरै ज्ञानका घमण्डमा ग्रस्त भ्रष्ट ज्ञानीहरुको दशा छ । हुन्छन् तिनी कुपथ नै, सिद्धान्त उनका निराधार हुन्छ । परन्तु 'हामी जस्तो कोही छैन' का घमण्डमा उनी आफ्ना तर्कहरुलाई यस्तो ठान्दछन् जस्तो आकाशबाट तारा टिपेर ल्याएका हुन् र यसरी 'ज्ञान तथा समझ' राख्दै उनी भ्रष्ट मात्र हुँदैनन्, अरुहरुलाई पनि पथभ्रष्ट गर्नुमा गर्व गर्दछन् । نعوذ بالله من هذا العلم الضال و الفهم السقيم و العقل الزائغ "हामी पथ-विचलनका ज्ञान तथा रोगी समझ एवं बक्र-बुद्धिबाट अल्लाहको शरण माँगदछौं ।"

[2]जसबाट उनका कान शिक्षा तथा सदुपदेश सुन्नुबाट तथा उनका हृदय संमार्गलाई बुझ्नबाट बञ्चित भइहाले ।

[3]अत: त्यसले सत्यलाई देख्न पनि सक्दैन ।

[4]जस्तो भन्यो : ﴿مَن يُضْلِلِ اللَّهُ فَلَا هَادِيَ لَهُ وَيَذَرُهُمْ فِي طُغْيَانِهِمْ يَعْمَهُونَ﴾

"जसलाई अल्लाह कुपथ गरिदिन्छ त्यसको कोही पथप्रदर्शक छैन, उनीहरुलाई उनको पथभ्रष्टतामा भौंतारिरहेको अवस्थामा छाडिदिन्छ ।" (अल-आराफ-१८६)

[5]अर्थात् चिन्तन-मनन गर्दैन ताकि वास्तविकता तिमीलाई प्रकट एवं स्पष्ट हुनजाओस् ।

[6]यी नास्तिक (भौतिकवादी) तथा उनीसित सहमत मक्काका मुश्रिकहरुको कथन हो जसले आख़िरत (परलोक) लाई मान्दैनथे । उनीहरु भन्थे कि यो सांसारिक जीवन नै प्रथम

إِلَّا يَظُنُّونَ ﴿٢٤﴾

ज्ञान नै छैन; यिनीहरु त मात्र भ्रममा परेका छन् ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ مَّا كَانَ حُجَّتَهُمْ إِلَّا أَن قَالُوا ائْتُوا بِآبَائِنَا إِن كُنتُمْ صَادِقِينَ ﴿٢٥﴾

(२५) तथा जब उनका समक्ष हाम्रा स्पष्ट (एवं प्रभावशाली) आयतहरुको पाठ गरिन्छ त उनका पासमा यस कथनका अतिरिक्त कुनै तर्क हुँदैन कि यदि साँचो हौ भने हाम्रा पूर्वजहरु ल्याइदेउ ।[1]

قُلِ اللَّهُ يُحْيِيكُمْ ثُمَّ يُمِيتُكُمْ ثُمَّ يَجْمَعُكُمْ إِلَىٰ يَوْمِ الْقِيَامَةِ لَا رَيْبَ فِيهِ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿٢٦﴾

(२६) (तपाईं) भनिदिनुस् कि अल्लाहले नै तिमीलाई जीवित गर्दछ अनि तिमीलाई मार्दछ, अनि तिमीलाई केयामतका दिन एकत्रित गर्नेछ जसमा कुनै सन्देह छैन, परन्तु अधिकतर मानिस जान्दैनन् ।

وَلِلَّهِ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ وَيَوْمَ تَقُومُ السَّاعَةُ يَوْمَئِذٍ يَخْسَرُ الْمُبْطِلُونَ ﴿٢٧﴾

(२७) तथा आकाशहरु एवं धर्तीको राज्य अल्लाहकै हो, तथा जुन दिन केयामत व्याप्त हुनेछ त्यस दिन असत्यवादी ठूलो हानिमा पर्नेछन् ।

तथा अन्तिम जीवन हो, त्यसका पश्चात कुनै जीवन छैन तथा मृत्यु एवं जीवन मात्र काल गतिको परिणाम हो । जस्तो दार्शनिकहरुको एक समूह भन्दछ कि प्रत्येक छत्तीस हजार वर्षका पश्चात प्रत्येक वस्तु आफ्नो दशामा फर्किहाल्छ तथा यो क्रम बिना कुनै रचयिता तथा प्रबन्धक स्वतः चलिरहेको छ तथा चलिरहने छ, न यसको आदि छ न अन्त यो समूहलाई 'दह्रीया' भनिन्छ। (इब्ने कसीर) प्रत्यक्ष कुरो छ कि यस सिद्धान्तलाई बुद्धिले पनि स्वीकार गर्दैन तथा धार्मिक युक्तिहरुका पनि विपरीत छ। हदीस कुदसीमा छ, अल्लाह तआला भन्नुहुन्छ : "आदमको पुत्र मलाई दुख पुग्छ । त्यो युगलाई नराम्रो भन्दछ (अर्थात् कार्यहरुलाई त्यससित सम्बन्धित गरी त्यसलाई नराम्रो भन्दछ) जबकि (युग स्वयं केही पनि होइन) म स्वयं युग हूँ। मेरै हातमा सबै अधिकार छन् । रात-दिन पनि म नै फर्काउँछु ।" (अल-बुख़ारी तफ़सीर सूरः अल-जासीयः, मुस्लिम, किताबुल अलफाज़ मिनल अदब, बावुन नहय अन सब्बिद्दहर)

[1]यो उनको सबभन्दा ठूलो तर्क हो जो उनको कटबहसीलाई स्पष्ट गर्दछ ।

وَتَرَىٰ كُلَّ أُمَّةٍ جَاثِيَةً ۚ كُلُّ أُمَّةٍ تُدْعَىٰ إِلَىٰ كِتَابِهَا الْيَوْمَ تُجْزَوْنَ مَا كُنتُمْ تَعْمَلُونَ ﴿٢٨﴾

(२८) तथा तपाईंले देख्नुहुनेछ कि प्रत्येक समुदाय घुँडा टेकी लडेको हुनेछ ।[1] प्रत्येक गिरोह आफ्ना कर्मपत्रतिर बोलाइनेछ, आज तिमीलाई आफूबाट गरिएका कुराको प्रतिफल दिइनेछ ।

هَٰذَا كِتَابُنَا يَنطِقُ عَلَيْكُم بِالْحَقِّ ۚ إِنَّا كُنَّا نَسْتَنسِخُ مَا كُنتُمْ تَعْمَلُونَ ﴿٢٩﴾

(२९) यो हो हाम्रो किताब जो तिम्रो विषयमा सत्य-सत्य बोलिराखेको छ ।[2] हामीले तिम्रा कर्म लेखाउने गर्दैजान्थ्यौं ।[3]

فَأَمَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فَيُدْخِلُهُمْ رَبُّهُمْ

(३०) त जसले ईमान स्वीकार गरे तथा उनीहरुले पुण्यका कार्य गरे[4] त उनलाई उनको प्रभु आफ्नो

[1]आयतबाट त यही विदित हुन्छ कि प्रत्येक गिरोह (चाहे त्यो अम्बियाका अनुयायीहरुका होस् अथवा उनका विरोधीहरुको) भय तथा डरले घुँडामा टेकी बसेको हुनेछ । (फ़तहुल क़दीर) यहाँसम्मकि सबैलाई हिसाबका लागि बोलाइनेछ । जस्तो कि आयतका आगामी अंशबाट प्रतिपादित छ ।

[2]यस किताबसित अभिप्राय यी सबै पंजिकाहरु हुन् जसमा मानिसका सबै कर्म अंकित हुनेछन् । ﴿وَوُضِعَ الْكِتَابُ وَجِيءَ بِالنَّبِيِّينَ وَالشُّهَدَاءِ﴾

"कर्मपत्र अगाडी ल्याइनेछन्, नबीहरु तथा साक्षीहरुलाई साक्ष्यका लागि प्रस्तुत गरिनेछ ।" (अज़्ज़ुमर-६९)

यो कर्मपत्र मानवीय जीवनका यस्ता रिकर्ड हुनेछन् जसमा कुनै प्रकारको घटी-बढी हुनेछैन । मानिसले उनलाई देखेर पुकारिहाल्नेछ ।

﴿مَالِ هَٰذَا الْكِتَابِ لَا يُغَادِرُ صَغِيرَةً وَلَا كَبِيرَةً إِلَّا أَحْصَاهَا﴾

"यो कस्तो कर्मपत्र हो जसले कुनै पनि सानो-ठूलो कुरालाई छाडेन, सबैथोक नै त यसमा अंकित छ ।" (अल-कहफ़-४९)

[3]अर्थात् हाम्रा ज्ञानका अतिरिक्त फरिश्ताहरु पनि हाम्रा आदेशले तिम्रा प्रत्येक कुरो लेख्थे तथा सुरक्षित राख्दथे ।

[4]यहाँ पनि ईमानका साथ पुण्यका कर्मको चर्चा गरेर त्यसको महत्व देखाइदियो तथा पुण्यका कार्य ती कर्म हुन् जो सुन्नतका अनुकूल गरियून्, न कि प्रत्येक त्यो कर्म जसलाई मानिस आफ्ना मनले राम्रो ठानोस् तथा त्यसलाई बडो व्यवस्था एवं रुचिले गरोस् । जस्तै धेरै बिदआत (इस्लाम धर्ममा पुण्य प्राप्तिका लागि गरिने नयाँ कर्म, गतिविधि र कुरा आदि) धार्मिक गिरोहहरुमा प्रचलित छन् तथा जो उनका निकट अनिवार्य तथा आवश्यक धार्मिक कर्महरुभन्दा पनि अधिक महत्व राख्दछन् । यसकारण अनिवार्य कर्तव्य तथा सुन्नतको त्याग त उनीकहाँ सामान्य छ, किन्तु बिदअत यस्तो आवश्यक छ ।

فِي رَحْمَتِهِ ۚ ذَٰلِكَ هُوَ الْفَوْزُ الْمُبِينُ ﴿٣٠﴾

कृपाको छत्र-छायाँमा लिइहाल्नेछ ।[1] यही स्पष्ट सफलता हो ।

وَأَمَّا الَّذِينَ كَفَرُوا أَفَلَمْ تَكُنْ آيَاتِي تُتْلَىٰ عَلَيْكُمْ فَاسْتَكْبَرْتُمْ وَكُنتُمْ قَوْمًا مُّجْرِمِينَ ﴿٣١﴾

(३१) परन्तु जसले कुफ्र गरे त (म उनीसित भन्नेछु) कि के मेरा आयतहरु तिमीलाई सुनाइन्नथ्यो ?[2] तैपनि तिमी गर्व गरिरहयौ तथा तिमी थियौ नै पापी मानिस ।[3]

وَإِذَا قِيلَ إِنَّ وَعْدَ اللَّهِ حَقٌّ وَالسَّاعَةُ لَا رَيْبَ فِيهَا قُلْتُم مَّا نَدْرِي مَا السَّاعَةُ إِن نَّظُنُّ إِلَّا ظَنًّا وَمَا نَحْنُ بِمُسْتَيْقِنِينَ ﴿٣٢﴾

(३२) तथा जतिखेर पनि भनिन्थ्यो कि अल्लाहको बाचा निश्चित रुपले सत्य छ तथा केयामत आउनुमा कुनै सन्देह छैन त तिमीले उत्तर दिन्थ्यौं कि हामी जान्दैनौं कि केयामत के वस्तु (हो) ? हामीलाई केही यस्तै सोच-विचार हुनजान्छ परन्तु हामीलाई विश्वास छैन ।[4]

وَبَدَا لَهُمْ سَيِّئَاتُ مَا عَمِلُوا وَحَاقَ بِهِم مَّا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ﴿٣٣﴾

(३३) तथा उनीमाथि आफ्ना कर्महरुको नराम्रोपना स्पष्ट भयो तथा जसलाई उनी उपहासमा उडाइराखेका थिए, उसले उनीहरुलाई घेरिहाल्यो ।[5]

कि उनमा कुनै प्रकारका आलस्यको कल्पना नै छैन, जबकि नबी सल्लल्लाहु अलैहि वसल्लमले त्यसलाई सबभन्दा धेरै नराम्रो काम भन्नुभएको छ ।

[1] رحمت (रहमत) सित अभिप्राय स्वर्ग हो । अर्थात स्वर्गमा लग्नेछ, जस्तो हदीसमा छ अल्लाहको आदेश हुनेछ ।

«أَنْتِ رَحْمَتِي أَرْحَمُ بِكِ مَنْ أَشَاءُ»

"तिमी मेरो रहमत हौ म तिमीद्वारा (अर्थात् तिमीमा प्रवेश दिएर) म जसमाथि चाहन्छु दया गर्छु ।" (सहीह बुख़ारी, तफ़सीर सूरः क़ाफ़)

[2] यो फट्कार (झपार) का रुपमा उनीसित भनिनेछ किनकि रसूल उनी निकट आएका थिए । उनले अल्लाहका आदेश उनलाई सुनाएका थिए । किन्तु उनीहरुले वास्ता नै गरेका थिएनन् ।

[3] अर्थात् सत्यलाई स्वीकार गर्नुमा तिमीले अहङ्कार गर्‍यौ तथा ईमान स्वीकार गरेनौं, बरु तिमी थियौ नै पापी ।

[4] अर्थात् केयामतको हुने कुरो मात्र अनुमान तथा विचार हो, हामीलाई त विश्वास छैन कि यो वास्तवमा हुनेछ ।

[5] अर्थात् केयामतको यातना, जसलाई उनीहरु उपहास अर्थात अनहोनी ठान्दथे ग्रस्त हुनेछन् ।

وَقِيلَ الْيَوْمَ نَنسَاكُمْ كَمَا نَسِيتُمْ لِقَاءَ يَوْمِكُمْ هَٰذَا وَمَأْوَاكُمُ النَّارُ وَمَا لَكُم مِّن نَّاصِرِينَ ﴿٣٤﴾

(३४) तथा भनिदियो कि आज हामी तिमीलाई बिर्सिदिनेछौं जस्तो कि तिमीले आफ्नू यस दिनको साक्षात्कारलाई बिर्सिदिएका थियौ[1] तिम्रो ठेगाना नरक हो तथा तिम्रो सहायता गर्नेछैन ।

ذَٰلِكُم بِأَنَّكُمُ اتَّخَذْتُمْ آيَاتِ اللَّهِ هُزُوًا وَغَرَّتْكُمُ الْحَيَاةُ الدُّنْيَا ۚ فَالْيَوْمَ لَا يُخْرَجُونَ مِنْهَا وَلَا هُمْ يُسْتَعْتَبُونَ ﴿٣٥﴾

(३५) यो यसकारण कि तिमीले अल्लाह (तआला) का आयतहरुको उपहास उडाएका थियौ तथा संसारका जीवनले तिमीलाई धोकामा पारेको थियो, त आजका दिन न त यिनी (नरक) बाट निकालिनेछन् तथा न उनीबाट विवशता एवं बहाना स्वीकार गरिनेछ ।[2]

فَلِلَّهِ الْحَمْدُ رَبِّ السَّمَاوَاتِ وَرَبِّ الْأَرْضِ رَبِّ الْعَالَمِينَ ﴿٣٦﴾

(३६) तसर्थ अल्लाहका लागि सबै प्रशंसा छ, जो आकाशहरु एवं धर्ती तथा सर्वलोकको पालनकर्ता हो ।

وَلَهُ الْكِبْرِيَاءُ فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۖ وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٣٧﴾

(३७) तथा समस्त (महिमा एवं) बडाई आकाशहरु एवं धर्तीमा उसैको छ,[3] तथा त्यही प्रभावशाली एवं हिम्मतवाला छ ।

[1]जस्तो हदीसमा वर्णित छ कि अल्लाहले आफ्ना केही भक्तहरुसित भन्नेछ : "कि मैले तिमीलाई पत्नी दिएको थिइन, के मैले तिमीलाई सम्मान दिएको थिइन, के मैले घोडा तथा इत्यादि तिम्रो अधीनमा दिएको थिइन, तिमी नाइकेपनापन गर्दथ्यौ तथा चुङ्गी पनि लिँदैरहयौ ।" त्यसले भन्नेछ, "हो यो ठीक हो मेरो पालनकर्ता ।" अल्लाह तआलाले उसित प्रश्न गर्नेछ, "के तिमीलाई मसित साक्षात्कारको विश्वास थियो ?" त्यसले भन्नेछ,"होइन ।" अल्लाहले भन्नेछ «فَالْيَوْمَ أَنْسَاكَ كَمَا نَسِيتَنِي» "त आज मैले तिमीलाई नरकमा हालेर बिर्सिदिनेछु जस्तो तिमी मलाई बिर्सयौ ।" (सहीह मुस्लिम किताबुज्जुहद)

[2]अर्थात् अल्लाहका निशानी तथा आदेशहरुको उपहास तथा संसारका धोकामा लिप्त रहनु, यी दुईटा अपराध यस्ता हुन् जसले तिमीलाई नरकको यातनाको पात्र बनाइदियो अब त्यसबाट निस्कनुको सम्भावना छैन तथा न यस कुराको आशा कि कुनै अवसरमा तिमीलाई तौबा तथा क्षमा-याचनाको अवसर प्रदान गरियोस् तथा तिमी क्षमा माँगेर अल्लाहलाई मानिहाल ।

[3]जस्तै हदीस कुदसीमा अल्लाह तआला भन्नुहुन्छ: "العظمة إزاري والكبرياء ردائي فمن نازعني واحدًا منهما أسكنته ناري" (मुस्लिम किताबुल बिर्र, बाबु तहरीमिल किब्र)

## सूरतुल अहक़ाफ़-४६

سُوْرَةُ الْاَحْقَافِ

सूर: अहक़ाफ़ मक्कामा अवतरित भएको तथा यसमा पैंतीस आयतहरु एवं चार रूकूअ छन् ।

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु तथा अत्यन्त कृपालु छ ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

(१) हा.मीम. ।[1]

حٰمٓ ۝١

(२) यस किताबको अवतरण अल्लाह शक्तिशाली हिक्मत (ज्ञान) वालाको तर्फबाट छ ।

تَنْزِيْلُ الْكِتٰبِ مِنَ اللّٰهِ الْعَزِيْزِ الْحَكِيْمِ ۝٢

(३) हामीले आकाशहरु तथा धर्ती एवं ती दुबैका मध्येका समस्त वस्तुहरुलाई सर्वोचित व्यवस्थाका साथ नै एउटा निर्धारित समयका लागि बनाएका छौं,[2] तथा काफ़िरहरु जुन वस्तुसित तर्साइन्छन् (त्यसबाट) मुख फर्काइहाल्छन् ।[3]

مَا خَلَقْنَا السَّمٰوٰتِ وَالْاَرْضَ وَمَا بَيْنَهُمَآ اِلَّا بِالْحَقِّ وَاَجَلٍ مُّسَمًّى ۗ وَالَّذِيْنَ كَفَرُوْا عَمَّآ اُنْذِرُوْا مُعْرِضُوْنَ ۝٣

(४) (तपाईं) भनिदिनुस् कि अलि हेर त जसलाई तिमी अल्लाहका अतिरिक्त पुकार्दछौ,

قُلْ اَرَءَيْتُمْ مَّا تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ اَرُوْنِيْ مَاذَا خَلَقُوْا



[1]यो सूर:का आरम्भिक अक्षर ती मुतशाबिहात (अनुरूपहरु) मध्ये छ जसको ज्ञान मात्र अल्लाहलाई छ यसकारण उनका अर्थ तथा भावार्थमा पर्नुको आवश्यकता छैन । तैपनि उनका दुई लाभ केही भाष्यकारहरुले वर्णन गरेका छन् जसलाई हामीले सूर: ३१ का आरम्भमा वर्णन गरिसकेका छौं ।

[2]अर्थात् आकाश एवं धर्तीको रचनाको एक विशेष उद्देश्य पनि छ तथा त्यो हो मानिसको परीक्षा । दोस्रो, त्यसका लागि एउटा समय पनि निश्चित छ । जब त्यो वचनको समय आइहाल्नेछ त आकाश तथा धर्तीका यी सम्पूर्ण व्यवस्था छत्-विक्षत भईहाल्छ । न आकाश हुनेछ, न धर्ती यो धर्ती हुनेछ । ﴿يَوْمَ تُبَدَّلُ الْاَرْضُ غَيْرَ الْاَرْضِ وَالسَّمٰوٰتُ﴾ (सूर: इब्राहीम-४८)

[3]अर्थात् ईमान स्वीकार नगर्नुको दशामा उनीहरुलाई पुनर्जीवन, हिसाब तथा प्रतिकारसित जो तर्साइन्छ त उनी त्यसमाथि ध्यान दिंदैनन्, न त्यसमा विश्वास गर्दछन्, न परलोकको यातनाबाट बँच्नुको तयारी गर्दछन् ।

مِنَ الْأَرْضِ أَمْ لَهُمْ شِرْكٌ فِي السَّمٰوٰتِ ۖ اِيْتُوْنِيْ بِكِتٰبٍ مِّنْ قَبْلِ هٰذَآ اَوْ اَثٰرَةٍ مِّنْ عِلْمٍ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ④

मलाई पनि त देखाउ कि उनीहरुले धर्तीको कुन चाहिं भाग बनाएका छन् अथवा आकाशहरुमा कुन चाहिं उनको भाग हो ?[1] यदि तिमी सच्चा हौ भने यसभन्दा पूर्व नै कि कुनै किताब अथवा कुनै ज्ञान नै जो उद्धत गरिन्छ, मेरो पासमा ल्याउ ।[2]

وَمَنْ اَضَلُّ مِمَّنْ يَّدْعُوْا مِنْ دُوْنِ اللّٰهِ مَنْ لَّا يَسْتَجِيْبُ لَهٗٓ اِلٰى يَوْمِ الْقِيٰمَةِ وَهُمْ عَنْ دُعَآئِهِمْ غٰفِلُوْنَ ⑤

(५) तथा त्यसभन्दा बढी ठूलो पथभ्रष्ट अन्य को होला जो अल्लाहका अतिरिक्त यस्तालाई पुकार्दछ, जो केयामतसम्म त्यसको प्रार्थना स्वीकार गर्न नसकून् बरु उनका पुकारबाट केवल अनभिज्ञ होऊन् ।[3]

وَاِذَا حُشِرَ النَّاسُ كَانُوْا لَهُمْ اَعْدَآءً وَّكَانُوْا بِعِبَادَتِهِمْ كٰفِرِيْنَ ⑥

(६) तथा जब मानिसहरुलाई एकत्रित गरिनेछ त यिनी उनका शत्रु भइहाल्नेछन् तथा उनको पूजाबाट साफ इन्कार गरिदिनेछ ।[4]

[1] أَرَأَيْتُم को अर्थ أَخْبِرُونِي अथवा أَرُونِي हो अर्थात् अल्लाहका अतिरिक्त जुन मूर्तिहरु अथवा व्यक्तिहरुको पूजा तिमी गर्दछौ मलाई देखाउ अथवा बताउ कि उनीहरुले धर्ती तथा आकाशको रचनामा के भाग लिएका छन् ? अभिप्राय यो हो कि जब आकाश तथा धर्तीको रचनामा उनको कुनै भाग छैन । बरु पूर्णरुपले ती सबको विधाता मात्र एक अल्लाह छ त त्यसपछि तिमी ती असत्य पूज्यहरुलाई अल्लाहको पूजामा साझेदार किन बनाउँछौ ?

[2] कुनै ईशदूतमाथि अवतरित किताब अथवा कुनै धार्मिक उधृतमा यो कुरो लेखिएको छ भने ल्याएर देखाउ ताकि तिम्रो सच्चाई सिद्ध हुनसकोस् । केही ज्ञाताहरुले (أَوْ أَثَارَةٍ مِّنْ عِلْمٍ) को अर्थ ज्ञानमा आधारित खुला प्रमाण गरेका छन् । यस स्थितिमा किताबसित तात्पर्य धार्मिक प्रमाण तथा أَثَارَةٍ مِن عِلْم सित अभिप्राय बौद्धिक प्रमाण प्रस्तुत गर । त्यसको प्रथम अर्थ أَثَر (असर) बाट लिएको छ अथवा بَقِيَّةٍ مِن عِلْم पहिला अम्बियाका शिक्षाहरुको शेष भाग जो विश्वसनीय सुत्रहरुबाट उद्धृत हुँदै आएको छ, त्यसमा यो कुरा होस् ।

[3] अर्थात् यी नै सबभन्दा ठूला पथभ्रष्ट हुन् जो पत्थरका मूर्तिहरु अथवा मृत व्यक्तिहरुलाई सहायतार्थ पुकार्दछन्, जो केयामतसम्म उत्तर दिनुमा असमर्थ छन् तथा असमर्थ नै होइन बरु पूर्णरुपमा अनभिज्ञ छन् ।

[4] यो विषय पवित्र कुरआनमा अनेक स्थानहरुमा वर्णित छ, जस्तै सूरः यूनुस-२९०,

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ ءَايَٰتُنَا بَيِّنَٰتٍ قَالَ ٱلَّذِينَ كَفَرُوا۟ لِلْحَقِّ لَمَّا جَآءَهُمْ هَٰذَا سِحْرٌ مُّبِينٌ ﴿٧﴾

(७) तथा उनीहरुलाई हाम्रा स्पष्ट आयतहरु पढेर सुनाइन्छन् त नास्तिकहरु सत्य कुरा[1] लाई जबकि उनका पास आइसक्यो, भनिदिन्छन् कि यो त खुल्ला जादू हो ।

أَمْ يَقُولُونَ ٱفْتَرَىٰهُ ۖ قُلْ إِنِ ٱفْتَرَيْتُهُۥ فَلَا تَمْلِكُونَ لِى مِنَ ٱللَّهِ شَيْـًٔا ۖ هُوَ أَعْلَمُ بِمَا تُفِيضُونَ فِيهِ ۖ كَفَىٰ بِهِۦ

(८) के उनीहरु भन्छन् कि त्यसलाई त उसले स्वयं बनाइहालेको छ । (तपाईं) भनिदिनुस् कि यदि मैले नै त्यसलाई बनाएर ल्याएको हूँ त तिमी मेरा लागि अल्लाहको तर्फबाट कुनै वस्तुको अधिकार राख्दैनौ ।[2] तिमी यस कुर्‌आनका विषयमा

सूरः मरियम-८१, ८२, सूरः अल-अनकबूत-२५ आदि आयतहरु । संसारमा यी उपास्यहरुका दुई प्रकार छन् । एक त निर्जीव पत्थर, बोट-बिरुवा तथा सूर्य, चन्द्र आदि छन् । अल्लाहले उनलाई जीवन तथा बोल्नुको शक्ति प्रदान गर्नेछ तथा हामीलाई यी वस्तुहरु बोलेर भन्नेछन् कि हामीलाई कदापि यसको ज्ञान छैन कि यो हाम्रा इबादत गर्दथे तथा तिम्रो ईश्वरतत्वमा साझी बनाउँथे । केही विद्वानहरु भन्छन् कि बोलेर होइन उनको स्थिति आफ्नो भावना व्यक्त गर्नेछ والله أعلم । उपास्यहरुको दोस्रो प्रकार त्यो हो, जसमा अम्बिया, फरिश्ताहरु तथा धर्मात्मा छन्, जस्तै माननीय ईसा तथा उज़ैर तथा अल्लाहका अन्य पुनीत भक्तहरु । यिनी अल्लाहका सदनमा त्यसैप्रकार उत्तर दिनेछन् जस्तो ईसा (अलैहिस्सलाम) को उत्तर कुर्‌आनमा उल्लेख छ । यसका अतिरिक्त शैतानले पनि इन्कार गर्नेछ । जस्तो कुर्‌आनमा उनका कथन उल्लेख गरिएको छ ।

﴿ تَبَرَّأْنَآ إِلَيْكَ ۖ مَا كَانُوٓا۟ إِيَّانَا يَعْبُدُونَ ﴾

"हामी तिम्रा समक्ष आफ्नो पूजारीहरुबाट बिलगाव (अलग्ग हुनु) व्यक्त गर्दछौं, यिनले हाम्रो उपासना गर्दैनथे ।" (अल-कसस-६३)

[1]यस सत्यसित अभिप्राय, जो उनका निकट आयो, पवित्र कुर्‌आन हो । यसका चमत्कार तथा प्रभाव शक्तिलाई देखेर उनी यसलाई जादू भन्दछन् । अनि त्यसबाट पनि हटेर अथवा त्यसबाट पनि कुरा बन्दैनथ्यो भने भन्थे कि यो त मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) को आफूले रचिएको कथन हो ।

[2]अर्थात् यदि तिम्रा यो कुरा सही हो कि म अल्लाहद्वारा बनाइएको रसूल होइन तथा यो कथन पनि मैले रचेको हो, अनि वस्तुतः म ठूलो अपराधी हूँ । अल्लाह मलाई यति ठूलो झूठमा बिना समाति छोड्ने छैन । तथा यदि यस्तो कुनै पकड भयो भने बुझिहाल्नु कि म झूठा हूँ तथा मेरो कुनै सहायता पनि नगर्नु । बरु यस्तो दशामा मलाई अल्लाहको पकडबाट बचाउनुको तिमीलाई कुनै अधिकार नै हुनेछैन । यसै विषयलाई अर्को स्थानमा यसप्रकार वर्णन गरिएको छ ।

شَهِيدًۢا بَيْنِي وَبَيْنَكُمْۖ وَهُوَ ٱلْغَفُورُ ٱلرَّحِيمُ ⑧

जे-जति भन्सुन गरिराखेका छौ, त्यसलाई अल्लाह राम्ररी जान्दछ ।[1] मेरा एवं तिम्रोमध्ये साक्षीका लागि सही पर्याप्त छ ।[2] तथा त्यो क्षमा गर्ने अत्यन्त दयालु छ ।[3]

قُلْ مَا كُنتُ بِدْعًا مِّنَ ٱلرُّسُلِ وَمَآ أَدْرِي مَا يُفْعَلُ بِي

(९) (तपाईं) भनिदिनुस् कि म कुनै पूर्णत: नयाँ पैग़म्बर त होइन[4] तथा न मलाई यो ज्ञात छ कि मसँग तथा तिमीसँग के गरिनेछ ।[5]

﴿وَلَوْ تَقَوَّلَ عَلَيْنَا بَعْضَ الْأَقَاوِيلِ * لَأَخَذْنَا مِنْهُ بِالْيَمِينِ * ثُمَّ لَقَطَعْنَا مِنْهُ الْوَتِينَ * فَمَا مِنكُم مِّنْ أَحَدٍ عَنْهُ حَاجِزِينَ﴾

"तथा यदि यो हामीमाथि कुनै कुरा रचिहाल्थ्यो भने अवश्य हामीले यसको दाहिने हात समातिहाल्थ्यौं, अनि त्यसका हृदयको नशा काटिदिन्थ्यौं, त्यस पश्चात तिमीहरुमध्ये कोही पनि मलाई यसबाट रोक्नेवाला हुन्नथ्यो ।" (अल-हाक्क: ४४-४७)

[1]अर्थात् जुन रुपले पनि तिमी कुरआनलाई झुठ्लाउँछौ, कहिले त्यसलाई जादू, कहिले ज्योतिष तथा कहिले स्वयंकृत भन्दछौ, अल्लाह त्यसलाई राम्ररी जान्दछ अर्थात् त्यसले तिम्रा यी निन्दनीय गतिविधिहरुको प्रतिकार (बदला) दिनेछ ।

[2]त्यो यस कुराको साक्ष्यको लागि पर्याप्त छ कि यो पवित्र कुरआन उसैतिरबाट अवतरित भएको छ तथा त्यही तिम्रो झुठलाउनु तथा विरोधको पनि साक्षी छ । यसमा पनि यिनका लागि कडा चेतावनी छ ।

[3]त्यसका लागि जो तौबा (क्षमा-याचना) गर्दछन्, ईमान स्वीकार गर्दछन् तथा कुरआनलाई सत्य ईशवाणी भन्दछन् । अभिप्राय यो हो कि अहिले समय छ कि तौबा गरी अल्लाहको क्षमा तथा दयाका पात्र बनिहाले ।

[4]अर्थात् प्रथम एवं अनौठो रसूल त होइन बरु म भन्दा पहिला पनि अनेक रसूल आइसकेका छन् ।

[5]अर्थात् संसारमा म मक्का नगरमै रहनेछु अथवा यहाँबाट निस्कनका लागि बाध्य हुनुपर्नेछ । मलाई स्वभाविक मृत्यु आउनेछ अथवा तिम्रा हातबाट मेरो हत्या हुनेछ, तिमी छिटै नै दण्ड पाउनेछौ अथवा तिमीलाई लामो अवसर दिइनेछ, यी सबै कुराहरुको ज्ञान केवल अल्लाहलाई छ । मलाई थाहा छैन कि भोलि मसँग तथा तिमीसँग के हुनेछ ? तैपनि आख़िरत (परलोक) का विषयमा निश्चित ज्ञान छ कि ईमानवाला स्वर्ग (जहन्नत) मा तथा काफ़िर नरक (जहन्नम) मा जानेछन् । तथा हदीसमा जो वर्णित छ कि नबी सल्लल्लाहु अलैहि व सल्लमले

وَلَآ بِكُمْ ۖ إِنْ أَتَّبِعُ إِلَّا مَا يُوحَىٰٓ إِلَيَّ وَمَآ أَنَا۠ إِلَّا نَذِيرٌ مُّبِينٌ ۝٩

म त केवल त्यसैको अनुसरण गर्दछु जो मतिर प्रकाशना गरिन्छ तथा म त केवल स्पष्टरुपले सावधान गरिदिनेवाला हूँ ।

قُلْ أَرَءَيْتُمْ إِن كَانَ مِنْ عِندِ ٱللَّهِ وَكَفَرْتُم بِهِۦ وَشَهِدَ شَاهِدٌ مِّنۢ بَنِىٓ إِسْرَٰٓءِيلَ عَلَىٰ مِثْلِهِۦ فَـَٔامَنَ وَٱسْتَكْبَرْتُمْ ۖ إِنَّ ٱللَّهَ لَا يَهْدِى ٱلْقَوْمَ ٱلظَّٰلِمِينَ ۝١٠

(१०) (तपाईं) भनिदिनुस् कि यदि यो (कुरआन) अल्लाहकै तर्फबाट छ तथा तिमीले त्यसलाई मानेका छैनौ तथा इस्राईलको सन्तानको एक साक्षी त्यस जस्तोको साक्ष्य पनि दिइसकेको छ तथा त्यो ईमान पनि स्वीकार गरिसकेको छ र तिमीले उद्दण्डता गरेका छौ ।[1] त निःसन्देह अल्लाह (तआला) अत्याचारी

कुनै सहाबीका निधनमा जब त्यसका विषयमा राम्रो विचार व्यक्त गरियो त भन्नुभयो,

﴿ تَبَرَّأْنَا إِلَيْكَ مَا كَانُوٓا۟ إِيَّانَا يَعْبُدُونَ ﴾

"अल्लाहको सौगन्ध ! मलाई अल्लाहको रसूल भएर पनि ज्ञान छैन कि केयामतमा मेरो तथा तिम्रो साथमा के गरिनेछ ?" (सहीह बुख़ारी मनाकिबुल असांर)

यसबाट एक निश्चित व्यक्तिका निश्चित परिणामको इन्कार छ, परन्तु यो कि त्यसका विषयमा पनि धार्मिक सुत्र उपस्थित छ, जस्तै अशरह मुबश्शरह (दस सहाबी जसलाई संसारमै स्वर्गको शुभसूचना नबीद्वारा सुनाइयो) तथा बद्रका सहाबा आदि (जसले बद्रका युद्धमा भाग लिए)

[1]यस इस्राईली सन्तानका साक्षीसित को तात्पर्य छ ? केही विद्वान भन्छन् कि यो सामान्य छ । इस्राईलको सन्तानमध्ये जसले पनि ईमान स्वीकार गरे ती यसका चरितार्थ हुन् । केही ज्ञाताहरु भन्छन् कि मक्काको कोही इस्राईली निवासी अभिप्राय हो, किनकि त्यो सूरः मक्कामा अवतरित भयो । केही अन्यका निकट यसबाट अभिप्राय अब्दुल्लाह पुत्र सलाम हुन्, तथा उनी यस आयतलाई मदनी (मदीनामा अवतरित) भन्दछन् । सहीहैनको हदीसबाट पनि यसलाई समर्थन प्राप्त हुन्छ । (सहीह बुख़ारी, मनाकिबिल अंसार, बाब मनाकेबि अब्दुल्लाह बिन सलाम) यसकारण इमाम शौकानीले यसै विचारलाई अधिमान दिएका छन् عَلَىٰ مِثْلِهِ (यसै जस्तो किताबको साक्ष्य) को अर्थ हो तौरातको गवाही, जो कुरआनलाई अल्लाहको तर्फबाट अवतरित हुने कुरालाई अनिवार्य बताउँछ, किनकि कुरआन पनि एकेश्वरवाद एवं पुर्नजन्मका प्रमाणमा तौरातकै समान छ । अभिप्राय यो हो कि अहले किताब (ग्रन्थधारीहरु) को साक्ष्य तथा उनीबाट ईमान स्वीकार गर्नुको पश्चात यस कुरआनको अल्लाहको तर्फबाट अवतरण हुनुमा कुनै सन्देह रहँदैन यसकारण अब तिम्रा इन्कार तथा अहंकारको कुनै औचित्य छैन । तिमीले आफ्ना यस नीति (व्यवहार) को परिणाम सोच्नुपर्छ ।

गुटलाई मार्ग देखाउँदैन ।

وَقَالَ الَّذِينَ كَفَرُوا لِلَّذِينَ آمَنُوا لَوْ كَانَ خَيْرًا مَّا سَبَقُونَا إِلَيْهِ ۚ وَإِذْ لَمْ يَهْتَدُوا بِهِ فَسَيَقُولُونَ هَٰذَا إِفْكٌ قَدِيمٌ ⑪

(११) तथा काफ़िरहरुले ईमान्दारहरुका विषयमा भने कि यदि यो (धर्म) उत्तम भएको भए यिनीहरु त्यसतिर हामीसित पहल गर्न पाउँदैनथे तथा किनकि उनीहरुले कुर्आनबाट मार्गदर्शन पाएनन् भने त यो भन्दिनेछन् कि यो प्राचीन झूठ हो ।[1]

وَمِن قَبْلِهِ كِتَابُ مُوسَىٰ إِمَامًا وَرَحْمَةً ۚ وَهَٰذَا كِتَابٌ مُّصَدِّقٌ لِّسَانًا عَرَبِيًّا لِّيُنذِرَ الَّذِينَ ظَلَمُوا وَبُشْرَىٰ لِلْمُحْسِنِينَ ⑫

(१२) तथा यसभन्दा पूर्व मूसाको किताब मार्गदर्शिका एवं दया थियो, तथा यो किताब छ पुष्टि गर्नेवाली अरबी भाषामा ताकि अत्याचारीहरुलाई तर्साओस् तथा सदाचारीहरुका लागि शुभ-सूचना होस् ।

إِنَّ الَّذِينَ قَالُوا رَبُّنَا اللَّهُ ثُمَّ اسْتَقَامُوا فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ⑬

(१३) नि:सन्देह जसले भने कि हाम्रो प्रभु अल्लाह हो अनि त्यसमाथि दृढ रहे त उनीमाथि न त कुनै भय हुनेछ तथा न उनी शोकग्रस्त हुनेछन् ।

أُولَٰئِكَ أَصْحَابُ الْجَنَّةِ خَالِدِينَ فِيهَا جَزَاءً بِمَا كَانُوا يَعْمَلُونَ ⑭

(१४) यी त स्वर्गमा जानेहरु हुन् जो सधैं त्यसैमा रहनेछन् ती कर्महरुका फलस्वरुप जो उनी गर्ने गर्थे ।

---

[1]मक्काका काफ़िर बिलाल, अम्मार, सुहैब तथा ख़ब्बाब रज़ियल्लाहु अन्हु जस्ता निर्धन मुसलमानहरुलाई देखेर, जसलाई इस्लाममा अग्रसर हुनुको सौभाग्य प्राप्त हुन थियो, भन्दथे कि यो धर्म राम्रो भएको भए त हामी जस्ता मान-मर्यादा भएको मानिस यसलाई पहिला स्वीकार गर्दथ्यौं न कि यिनीहरु, अर्थात् उनीहरुले स्वयंबाट एवं मानिहाले कि अल्लाहकहाँ उनको उच्च पद छ । अत: यो धर्म यदि सच्चा भएको भए त अल्लाहले यसलाई स्वीकार गर्नमा हामीलाई पछाडी छाड्दैनथ्यो तथा हामीले यसलाई मानेनौं भने यसको अर्थ यो हो कि यो पुरानो झूठ हो । अर्थात् कुर्आनलाई उनीहरुले पुराना झूठ भने जस्तो उनीहरु यसलाई पूर्वजहरुको कल्पित कथा भन्दथे, जबकि सांसारिक धन-सम्पत्तिमा अधिक हुनु अल्लाहका निकट प्रिय हुनुको प्रमाण होइन (जस्तो उनीहरुलाई भ्रम भयो अथवा शैतानले भ्रममा पारिदियो) अल्लाहका निकट स्वीकार हुनको प्रमाण होइन (जस्तै उनीहरुलाई भ्रम भयो अथवा शैतानले भ्रममा पारिदियो) अल्लाहका निकट स्वीकार हुनका लागि ईमान तथा शुद्धताको आवश्यकता छ । तथा यस ईमान तथा शुद्धताको सम्पत्ति जसलाई चाहन्छ दिन्छ । जस्तै परीक्षाका लागि धन-सम्पत्ति जसलाई चाहन्छ दिन्छ ।

وَوَصَّيْنَا الْإِنسَانَ بِوَالِدَيْهِ إِحْسَانًا ۖ حَمَلَتْهُ أُمُّهُ كُرْهًا وَوَضَعَتْهُ كُرْهًا ۖ وَحَمْلُهُ وَفِصَالُهُ ثَلَاثُونَ شَهْرًا ۚ حَتَّىٰ إِذَا بَلَغَ أَشُدَّهُ وَبَلَغَ أَرْبَعِينَ سَنَةً قَالَ رَبِّ أَوْزِعْنِي أَنْ أَشْكُرَ نِعْمَتَكَ الَّتِي أَنْعَمْتَ عَلَيَّ وَعَلَىٰ وَالِدَيَّ وَأَنْ أَعْمَلَ صَالِحًا تَرْضَاهُ وَأَصْلِحْ لِي

(१५) तथा हामीले मनुष्यलाई आफ्ना माता-पिताका साथ सद्व्यवहार गर्नुको आदेश दिएका छौं । त्यसकी माताले त्यसलाई दुख सहेर गर्भमा राखिन् तथा दुख सहन गरी त्यसलाई जन्म दिइन् ।[1] त्यसका गर्भधारण तथा त्यसका दूध छोडाउनुको अवधि तीस महिनाको छ,[2] यहाँसम्मकि जब त्यो आफ्नो कुरा वयस्कतालाई तथा चालीस वर्षको आयुलाई पुग्यो[3] त भन्नलाग्यो, हे मेरा प्रभु ! मलाई सन्मति देउ[4] कि म तिम्रो त्यस उपकारको

[1]यस दुख तथा कष्टको चर्चा गरेर माता-पिताका साथ राम्रो व्यवहार गर्नुमा विशेष जोड दिएका छौं । जसबाट यो पनि विदित हुन्छ कि माता यस सद्व्यवहारका आदेशमा पिताभन्दा प्रथम छ। किनकि नौं महिनासम्म लगातार गर्भको दुख र पछि प्रसवको दुख मात्र आमाले नै सहन्छ। यस्तै दूध पिलाउनुको पीडा पनि एक्लो आमाले नै सहन गर्दछे, बाबुले यसमा भाग लिँदैन। यसकारण हदीसमा पनि आमासँग राम्रो व्यवहारलाई प्रधानता दिएको छ तथा बुबाको पद त्यसका पश्चात भनिएको छ। एक सहाबीले नबी सल्लल्लाहु अलैहि वसल्लमसित सोधे,"मेरा राम्रा व्यवहारको सर्वाधिक पात्र को छ ? उहाँ सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो : 'तिम्री आमा ।' उनले फेरि यही सोधे,"उहाँले यही उत्तर दिनुभयो । तेस्रो पटक पनि यही उत्तर दिनुभयो । चौथो चरणमा प्रश्न गर्नुका पश्चात उहाँले भन्नुभयो : 'तिम्रो पिता ।' (सहीह मुस्लिम, किताबुल बिर्रे वस्सिला प्रथम अध्याय)

[2]فِصَالٌ (फिसाल) को अर्थ दूध छोडाउनु हो । यसबाट केही सहाबाले यो प्रमाणित गरेका छन् कि कमसेकम गर्भको अवधि छ महिना छ, अर्थात् यदि छ महिनाका पश्चात कुनै स्त्रीको बच्चा पैदा हुन्छ भने त्यो बच्चा सही छ, अवैध छैन, यसकारण कि कुर्आनले दूध पिलाउनुको अवधि दुई वर्ष (चौबीस महिना) भनेको छ (सूरः लुकमान-१४, सूरः बक़रः २३३) यस हिसाबले गर्भको अवधिमात्र छ महिना नै शेष रहन्छ ।

[3]पूर्ण वयस्कता(أَشُدَّهُ) को आयुसित अभिप्राय युवावस्था हो । केही विद्वानले त्यसलाई १८ वर्षदेखि अर्थ लगाएका छन्, यहाँसम्मकि पछि बढ्दै-बढ्दै चालीस वर्षको आयुलाई पुगिहाल्यो । यो मानसिक शक्तिका पूर्ण हुनुको आयु हो । अतः व्याख्याकारहरुको विचार छ कि प्रत्येक नबीलाई चालीस वर्षको आयुको पश्चात नै नबूअत (दूतत्व) बाट सम्मानित गरियो । (फ़तहुल क़दीर)

[4]أَوْزِعْنِي यो أَلْهِمْنِي को अर्थमा छ, अर्थात् मलाई सन्मति प्रदान गर । यसबाट तर्क दिँदै विद्वानहरुले भनेका छन् कि यस आयुका पश्चात मानिसलाई यो दुआ प्रायतः पढ्दै

فِيْ ذُرِّيَّتِيْ ۚ اِنِّيْ تُبْتُ اِلَيْكَ وَاِنِّيْ مِنَ الْمُسْلِمِيْنَ ﴿١٥﴾

कृतज्ञता व्यक्त गर्नसकूँ जो तिमीले ममाथि तथा मेरा माता-पितामाथि उपकार गरेका छौ तथा यो कि म यस्ता पुण्यका कार्य गरुँ जसबाट तिमी प्रसन्न होउ तथा तिमीले मेरो सन्तान पनि सदाचारी बनाउ । म तिमीतिर ध्यान गर्दछु तथा म मुसलमानहरुमध्ये हूँ ।

اُولٰٓئِكَ الَّذِيْنَ نَتَقَبَّلُ عَنْهُمْ اَحْسَنَ مَا عَمِلُوْا وَنَتَجَاوَزُ عَنْ سَيِّاٰتِهِمْ فِيْٓ اَصْحٰبِ الْجَنَّةِ ؕ وَعْدَ الصِّدْقِ الَّذِيْ كَانُوْا يُوْعَدُوْنَ ﴿١٦﴾

(१६) यिनै त्यस्ता मानिस हुन् जसका पुण्यका कार्य हामीले स्वीकार गर्दछौं तथा जसका नराम्रा कार्यहरुलाई क्षमा गरिदिन्छौं, (यिनी) स्वर्गमा जाने मानिसहरुमध्ये होऊन् । यस सत्य वचनका अनुसार जो उनीसँग गरिन्थ्यो ।

وَالَّذِيْ قَالَ لِوَالِدَيْهِ اُفٍّ لَّكُمَآ اَتَعِدٰنِنِيْٓ اَنْ اُخْرَجَ وَقَدْ خَلَتِ الْقُرُوْنُ مِنْ قَبْلِيْ ۚ وَهُمَا يَسْتَغِيْثٰنِ اللّٰهَ وَيْلَكَ اٰمِنْ ۖ اِنَّ وَعْدَ اللّٰهِ حَقٌّ ۚ فَيَقُوْلُ مَا هٰذَآ اِلَّآ اَسَاطِيْرُ الْاَوَّلِيْنَ ﴿١٧﴾

(१७) तथा जसले आफ्ना माता-पितासित भने कि उफ् छ तिमी दुबैमाथि (तिमीहरुसित म दिक्क भइहाले)[१] तिमी मसित यही भनिरहनेछौ कि (म मर्नुका पश्चात पुनः) जीवित गरिने छु, म भन्दा पूर्व पनि यस युग समुदाय गुज्रिसकेका छन् ।[२] ती दुबै अल्लाहका दरबारमा विन्ती गर्दछन् (तथा भन्दछन्) कि अफसोच तिमीमाथि तिमी ईमान्दार

रहनुपर्छ, अर्थात رَبِّ اَوزِعْنِي देखि مِنَ الْمُسْلِمِيْنَ सम्म ।

[१]उपरोक्त आयतमा असल सन्तान (सपूत) को चर्चा गरिएको थियो, जो आमा-बुवाका साथ सद्व्यवहार गर्दछ तथा उनका लागि भलाईको प्रार्थना पनि । अब उनका विपरीत अट्टेरी एवं अवज्ञाकारी सन्तानको चर्चा गरिंदैछ जो माता-पिताका साथ दुर्व्यवहारले प्रस्तुत हुन्छ । اُفٍّ لَّكُمَا उफ् (धूत) त तिमी दुबैमाथि । 'उफ्' शब्द घृणा व्यक्त गर्नका लागि उपयुक्त हुन्छ । अर्थात् अवज्ञाकारी सन्तान माता-पिताका हित्उपदेशमाथि अथवा ईमान तथा सत्कर्मका आमन्त्रणमा घृणा तथा कडा विरोध देखाउँछ, जुन कुराको सन्तानलाई कदापि अनुमति छैन । यो आयत सामान्य छ, सबै अवज्ञाकारी सन्तान यसको चरितार्थ छ ।

[२]अभिप्राय यो हो कि त्यो पुनः जीवित भई जगतमा नआओस्, जबकि पुनर्जीवनको अभिप्राय केयामतका दिन जीवित हुनु हो जसका पश्चात हिसाब हुनेछ ।

बनिहाल, निःसन्देह अल्लाहको वादा (वाचा) सत्य छ। त्यसले उत्तर दिन्छ कि यी त केवल पूर्वकालीन मानिसहरुका कथनहरु हुन्।[1]

أُولَٰئِكَ الَّذِينَ حَقَّ عَلَيْهِمُ الْقَوْلُ فِي أُمَمٍ قَدْ خَلَتْ مِن قَبْلِهِم مِّنَ الْجِنِّ وَالْإِنسِ ۖ إِنَّهُمْ كَانُوا خَاسِرِينَ ﴿١٨﴾

(१८) (यिनै) ती मानिसहरु हुन् जसमाथि अल्लाह (का प्रकोप) को वादा सत्य भइहाल्यो[2] ती जिन्न तथा मनुष्यहरुका गिरोहहरुका साथ जो उनीभन्दा पूर्व गुज्रिसकेका छन्।[3] यिनी निश्चित रुपमा क्षतिग्रस्त थिए।

وَلِكُلٍّ دَرَجَاتٌ مِّمَّا عَمِلُوا ۖ وَلِيُوَفِّيَهُمْ أَعْمَالَهُمْ وَهُمْ لَا يُظْلَمُونَ ﴿١٩﴾

(१९) तथा प्रत्येकलाई आ-आफ्ना कर्महरुका अनुसार पद प्राप्त हुनेछन्[4] ताकि उनीहरुलाई उनका कर्महरुका प्रतिफल देओस् तथा तिनीहरुलाई अत्याचार गरिने छैन।[5]

وَيَوْمَ يُعْرَضُ الَّذِينَ كَفَرُوا

(२०) तथा जुन दिन काफ़िर नरक्का नजिक ल्याइनेछन्[6] (भनिनेछ) कि तिमीले आफ्ना

---

[1]माता-पिता मुसलमान हुन्छन् तथा सन्तान काफ़िर त्यहाँ सन्तान तथा माता-पिताका बीच यसैप्रकार वाद-विवाद हुन्छ, जसको एउटा उदाहरण आयतमा दिइएको छ।

[2]जो पहिला नै अल्लाहका ज्ञानमा थियो, अथवा शैतानका उत्तरमा जो अल्लाहले भनेको थियो : ﴿لَأَمْلَأَنَّ جَهَنَّمَ مِنكَ وَمِمَّن تَبِعَكَ مِنْهُمْ أَجْمَعِينَ﴾

"म तिमीसित तथा तिम्रा सबै अनुयायीहरुसित नरक्लाई भरिदिनेछु।" (सूरः साद-८५)

[3]अर्थात् यिनी पनि ती काफ़िरहरुमा सम्मिलित भइहाले जो जिन्न तथा मानिसहरुमध्ये केयामतका दिन क्षतिग्रस्त हुनेछन्।

[4]मोमिन तथा काफ़िर दुबैको उनका कर्महरुका अनुसार अल्लाहका सदनमा स्थान हुनेछ। मोमिन उच्च पदहरुबाट सम्मानित हुनेछन् तथा काफ़िर नरक्को सबैभन्दा तल्लो श्रेणीमा हुनेछन्।

[5]पापीलाई त्यसको पापभन्दा अधिक दण्ड दिइने छैन तथा सदाचारीहरुका प्रतिउपकार मा कमी हुनेछैन बरु प्रत्येकलाई भलाई अथवा बुराईमध्ये त्यही प्राप्त हुनेछ जसका उनी पात्र हुनेछन्।

[6]अर्थात् त्यस समयलाई स्मरण गर जब काफ़िरहरुका आँखाका आवरण हटाइनेछन् तथा उनी नरक्को अग्नि देखिराखेको हुनेछन् अथवा त्यसका समीप हुनेछन्। केही ज्ञाताहरुले يُعْرَضُونَ को अथ

عَلَى النَّارِ أَذْهَبْتُمْ طَيِّبَاتِكُمْ فِي حَيَاتِكُمُ الدُّنْيَا وَاسْتَمْتَعْتُمْ بِهَا فَالْيَوْمَ تُجْزَوْنَ عَذَابَ الْهُونِ بِمَا كُنْتُمْ تَسْتَكْبِرُونَ فِي الْأَرْضِ بِغَيْرِ الْحَقِّ وَبِمَا كُنْتُمْ تَفْسُقُونَ ﴿٢٠﴾

पुण्य संसारका जीवनमा नै नष्ट गरिदियौ[1] तथा उनीबाट लाभ उठाइसक्यौ त आज तिमीलाई अपमानको यातनाको दण्ड दिइनेछ यसकारण कि तिमीले धर्तीमा अनाहक अहङ्कार गर्दथ्यौ तथा यसकारण पनि कि तिमी आज्ञाको पालन गर्दैनथ्यौ ।[2]

وَاذْكُرْ أَخَا عَادٍ إِذْ أَنْذَرَ قَوْمَهُ بِالْأَحْقَافِ وَقَدْ خَلَتِ النُّذُرُ مِنْ

(२१) तथा आदका भाइलाई याद गर जबकि उसले आफ्ना समुदायवालाहरुलाई अहक़ाफ़मा (रेतका टीलाहरुमा) तर्साए[3] तथा निःसन्देह

يُعَذَّبُونَ (यातना दिइनेछन्) गरेका छन् तथा केही अन्य भन्दछन् कि वाक्यमा परिवर्तन छ । अभिप्राय हो जब आगो उनीमाथि प्रस्तुत गरिनेछ تُعْرَضُ النَّارُ عَلَيْهِم (फ़तहुल क़दीर)

[1] طَيِّبَاتٌ (तय्येबात) सित अभिप्राय त्यो वरदान हो जो मानिस रुचिले खान्छन् पिउँछन्, प्रयोग गर्छन् तथा स्वाद एवं आनन्द प्रतीत गर्दछन् । किन्तु परलोकका चिन्तनका साथ उनका प्रयोग हुन्छ भने त अर्कै कुरा छ, जस्तै मोमिन (ईमान्दार) गर्दछ, त्यसका साथ अल्लाहको आज्ञा पालन गरी अल्लाहको कृतज्ञताको पनि व्यवस्था गर्दछ । परन्तु परलोकका चिन्तनबाट अलग भई उनको प्रयोग मानिसलाई उद्दण्ड तथा विद्रोही बनाईदिन्छ, जस्तो काफ़िर गर्दछ तथा यसो अल्लाहको अवज्ञा तथा कृतघ्नता गर्दछ । अतः मोमिनलाई त्यसको कृतज्ञता तथा अनुपालनका कारण यो वरदान बरु तिनीभन्दा अति उत्तम वरदान परलोकमा प्राप्त हुनेछन्, जबकि काफ़िरहरुसित त्यही सबै भनिनेछ जो आयतमा चर्चित छ ।﴿أَذْهَبْتُمْ طَيِّبَاتِكُمْ﴾ को अन्य अनुवाद हो 'संसारका जीवनमा तिमीले आफ्ना आनन्द लिइहाल्यौ तथा निकै लाभ प्राप्त गर्‍यौ ।

[2] उनको यातनाका दुई कारण भनिएका छन् । एउटा अनृत अभिमान, जसका आधारमा सत्यका अनुसरणबाट मानिस भाग्दछ । दोस्रो फिस्क, निर्भय भई कुकर्म गर्नु । यी दुवै कुरा सबै काफ़िरहरुमा साझा हुन्छन् । ईमानवालाहरुलाई यी दुवै कुराहरुवाट पन्छिनु पर्छ ।

टिप्पणी : केही सहाबाका बारेमा वर्णित छ कि उनका सामु उत्तम आहार आदि आउँथ्यो भने यो आयत आइहाल्थ्यो तथा उनी यस भयले त्यसलाई त्यागदिन्थे कि कहीं आख़िरतमा हामीलाई पनि यो नभनियोस् कि आफ्नो आनन्द तिमीले आफ्नो संसारमा लिइहाल्यौ । यो उनको त्यो स्थिति हो जो अपार संयम तथा सदाचारलाई प्रदर्शित गर्दछ । यसको यो अर्थ होइन कि उनीहरु राम्रा कुराको प्रयोगलाई उचित ठान्दैनथे ।

[3] أَحْقَاف (अहक़ाफ़) حِقْف (हिक्फ़) को बहुवचन हो । अर्थात् रेतको अग्लो लामो ढिस्को (टील) ।

بَيْنِ يَدَيْهِ وَمِنْ خَلْفِهِۦٓ أَلَّا تَعْبُدُوٓا۟ إِلَّا ٱللَّهَ ۖ إِنِّىٓ أَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿٢١﴾

त्यसभन्दा पूर्व पनि तर्साउनेवाला गुज्रिसकेका छन् तथा त्यसका पश्चात पनि कि तिमी अल्लाह (तआला) का अतिरिक्त अन्यको इबादत नगर । निःसन्देह म तिमीमाथि ठूला दिनको यातनाबाट तर्सन्छु ।[1]

قَالُوٓا۟ أَجِئْتَنَا لِتَأْفِكَنَا عَنْ ءَالِهَتِنَا فَأْتِنَا بِمَا تَعِدُنَآ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ﴿٢٢﴾

(२२) समुदायले उत्तर दिए कि के तपाईं हाम्रा निकट यसकारण आउनु भएको छ कि हामीलाई आफ्ना देवताहरु (को पूजा) बाट रोकिदिनुस् ।[2] त यदि तपाईं साँचो हुनुहुन्छ भने जुन प्रकोपहरुको तपाईं वाचा गर्नुहुन्छ, तिनीहरुलाई हामीमाथि पारिदिनुस् ।

قَالَ إِنَّمَا ٱلْعِلْمُ عِندَ ٱللَّهِ وَأُبَلِّغُكُم مَّآ أُرْسِلْتُ بِهِۦ وَلَٰكِنِّىٓ أَرَىٰكُمْ قَوْمًا تَجْهَلُونَ ﴿٢٣﴾

(२३) (आदरणीय हूदले) भने कि (यसको) ज्ञान त अल्लाहकै पासमा छ, म त जो सन्देश दिइएर पठाइएको थिएँ, त्यो तिमीलाई पुऱ्याइराखेको छु । परन्तु म देखिराखेको छु कि तिमीहरु मूर्खता गरिराखेका छौ ।[4]

[1]केही ज्ञाताहरुले यसको अर्थ पहाड तथा गुफा गरेका छन् । यो ईशदूत हूद (अलैहिस्सलाम) को जाति, प्रथम आदका क्षेत्रको नाम हो जो हज्रमूत (यमन) का निकट थियो । मक्काका काफ़िरहरुद्वारा झुठ्लाउनुका कारण नबी सल्लल्लाहु अलैहि व सल्लमका सान्त्वनाका लागि विगत अम्बियाका घटनाहरुको चर्चा गरिंदैछ ।

[1] يوم عظيم (ठूलो दिन) सित अभिप्राय केयामतको दिन हो, जसलाई त्यसको भयानकताका कारण उचित रुपले ठूलो दिवस भनिएको छ ।

[2] لِتَأْفِكَنَا ، لِتَصْرِفَنَا अथवा لِتَمْنَعَنَا अथवा لِتُزِيلَنَا सबै पर्यायवाची हुन् । ताकि तिमी हाम्रा उपास्यहरुको उपासनाबाट रोकिदेउ, फेरिदेऊ, हटाइदेउ ।

[3]अर्थात् प्रकोप कहिले आउनेछ ? अथवा संसारमा आउनेछैन बरु आख़िरतमा तिमीलाई दण्ड दिइनेछ, त्यसको ज्ञान मात्र अल्लाहलाई छ, त्यही आफ्नो इच्छा अनुसार निर्णय गर्दछ । मेरो काम त मात्र सन्देश पुऱ्याउनु हो ।

[4]कि एक त कुफ्रमाथि दुराग्रह गरिराखेका छौ । दोस्रो, मसित यस्तो वस्तुको माग गरिराखेका छौ जुन मेरो अधिकारमा छैन ।

فَلَمَّا رَأَوْهُ عَارِضًا مُّسْتَقْبِلَ أَوْدِيَتِهِمْ قَالُوا هَٰذَا عَارِضٌ مُّمْطِرُنَا ۚ بَلْ هُوَ مَا اسْتَعْجَلْتُم بِهِ ۖ رِيحٌ فِيهَا عَذَابٌ أَلِيمٌ ﴿٢٤﴾

(२४) अनि जब उनले प्रकोपलाई मेघका रुपमा देखे, आफ्ना मैदानहरुतिर आउँदै त भन्नलागे कि यो मेघ हामीमाथि वर्षनेवाला छ,[1] (होइन) बरु वास्तवमा यो मेघ त्यो (प्रकोप) हो जसको तिमी शीघ्रता मच्चाइराखेका थियौ[2] वायु हो जसमा कष्टदायी यातनाहरु छन् ।[3]

تُدَمِّرُ كُلَّ شَيْءٍ بِأَمْرِ رَبِّهَا فَأَصْبَحُوا لَا يُرَىٰ إِلَّا مَسَاكِنُهُمْ ۚ

(२५) जो आफ्ना प्रभुका आदेशले प्रत्येक वस्तुलाई ध्वस्त गरिदिनेछ त उनीहरु यस्ता भइहाले कि उनका घरहरुका अतिरिक्त केही देखाइ

[1]दीर्घकालदेखि उनीकहाँ वर्षा भएको थिएन । उडिराखेको बादल देखेर उनी प्रसन्न भए कि अब वर्षा हुनेछ । बादललाई عَارِض (आरिज़) यसकारण भन्दछन् कि बादल आकाशको चौडाइमा प्रकट हुन्छ ।

[2]यो ईशदूत हूद अलैहिस्सलामले उनीसित भने कि यो केवल बादल होइन जस्तो तिमी सम्भिराखेका छौ । यो त्यो प्रकोप हो जसलाई शीघ्र ल्याउनलाई तिमीले माग गरिराखेका थियौ ।

[3]अर्थात् त्यो वायु जसबाट त्यस जातिको विनाश भयो, ती बादलहरुबाट नै उठ्यो तथा निस्क्यो तथा अल्लाहको इच्छाले उनलाई र उनको प्रत्येक वस्तुलाई ध्वस्त गरिहाल्यो । यसकारण हदीसमा वर्णन छ, आदरणीय आएशाले नबी सल्लल्लाहु अलैहि व सल्लमसित सोध्नुभयो कि मानिस त बादल देखेर प्रसन्न हुन्छन् कि वर्षा हुनेछ, किन्तु यसका विपरीत तपाईं सल्लल्लाहु अलैहि व सल्लमका अनुहारमा व्याकुलताका चिन्हहरु देखिन्छन् । उहाँले भन्नुभयो कि आएशा (रज़ीयल्लाहु अन्हु) यस कुरोको के विश्वास कि यस बादलमा प्रकोप नहोला, जबकि एक जाति वायुका प्रकोपबाट नै ध्वस्त गरियो । त्यस जातिले पनि बादललाई देखेर भनेको थियो, "यो बादल हो जो हामीमाथि जल वर्षाउने छ ।" (बुख़ारी तफ़सीर सूरतिल अहक़ाफ, मुस्लिम-किताबु सलातिल इस्तिस्का) एक अन्य हदीसमा छ कि जब प्रचण्ड वायु चल्थ्यो त उहाँ सल्लल्लाहु अलैहि व सल्लमले यो दुआ पढ्नुहुन्थ्यो ।

«اللَّهُمَّ إِنِّي أَسْأَلُكَ خَيْرَهَا، وَخَيرَ مَا فِيهَا، وخَيْرَ ما أُرْسِلَتْ بِهِ، وأَعُوذُ بِكَ مِنْ شَرِّهَا، وشَرِّ مَا أُرْسِلَتْ بِهِ».

"तथा जब आकाशमा बादल घना हुन्थे त उहाँ सल्लल्लाहु अलैहि व सल्लमको रङ्ग बदलिन्थ्यो तथा भयको एक अवस्था उहाँमाथि छाइहाल्थ्यो, जसबाट उहाँ व्याकूल रहनुहुन्थ्यो, कहिले बाहिर निस्कनु हुन्थ्यो, कहिले भित्र जानुहुन्थ्यो, कहिले अगाडी जानुहुन्थ्यो कहिले पछाडी । अनि जब वर्षा भइहाल्थ्यो त उहाँ सल्लल्लाहु अलैहि व सल्लमले चयनका सास फेर्नुहुन्थ्यो ।" (सहीह मुस्लिम, उपरोक्त बाब)

كَذٰلِكَ نَجْزِي الْقَوْمَ الْمُجْرِمِيْنَ ﴿٢٥﴾

दिंदैनथ्यो ।[१] पापीहरुका गिरोहलाई यसैप्रकार दण्ड दिन्छौं ।

وَلَقَدْ مَكَّنّٰهُمْ فِيْمَآ اِنْ مَّكَّنّٰكُمْ فِيْهِ وَجَعَلْنَا لَهُمْ سَمْعًا وَّاَبْصَارًا وَّ اَفْـِٕدَةً ۖ فَمَآ اَغْنٰى عَنْهُمْ سَمْعُهُمْ وَلَآ اَبْصَارُهُمْ وَلَآ اَفْـِٕدَتُهُمْ مِّنْ شَيْءٍ اِذْ كَانُوْا يَجْحَدُوْنَ ۙ بِاٰيٰتِ اللّٰهِ وَحَاقَ بِهِمْ مَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ﴿٢٦﴾

(२६) तथा निश्चित रुपले हामीले (आदका समुदाय) लाई त्यो शक्ति प्रदान गरेका थियौं जो तिमीलाई दिएकै थिएनौं, तथा हामीले उनीहरुलाई कान, आँखा एवं हृदय पनि प्रदान गरेका थियौं । परन्तु उनका कान, आँखा एवं हृदयहरुले उनीहरुलाई कुनै पनि लाभ पुऱ्याएनन्[२] जबकि उनी अल्लाह (तआला) का आयतहरुलाई इन्कार गर्नथाले तथा जुन कुराका उनीहरु उपहास उडाउने गर्दथे, त्यही उनीमाथि पल्टेर आयो ।[३]

وَلَقَدْ اَهْلَكْنَا مَا حَوْلَكُمْ مِّنَ الْقُرٰى وَصَرَّفْنَا الْاٰيٰتِ لَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿٢٧﴾

(२७) तथा निःसन्देह हामीले तिम्रा निकटवर्ती (क्षेत्रका) वस्तीहरुलाई ध्वस्त गरिदियौं[४] तथा (नाना-प्रकारका) हामीले निशानीहरु वर्णन गरिदियौं ताकि उनीहरु फर्किहालून् ।[५]

[१]अर्थात् مكين (घर भएका) सबै ध्वस्त भइहाले तथा मात्र घर शिक्षाप्रद चिन्हका रुपमा शेष रहे ।

[२]यो मक्कावासीहरुलाई सम्बोधित गरी भनिंदैछ कि तिमी के हौ ? तिमीभन्दा पहिला जातिहरु जसलाई हामीले ध्वस्त गऱ्यौं, शक्ति एवं बल मान-मर्यादामा कहीं अधिक थिए, किन्तु जब उनीहरुले अल्लाहद्वारा प्रदान गरिएका योग्यताहरु (कान, आँखा तथा हृदयलाई सत्य सुन्नु, देख्नु तथा सम्झनुका लागि प्रयोग त गरेनन् त अन्ततः हामीले उनलाई ध्वस्त गरिदियौं तथा यी वस्तुहरु उनका केही काम आउन सकेनन् ।

[३]अर्थात् जुन कुरोलाई उनी अनहोनी सम्झेर उपहास स्वरुप गरिराखेका थिए कि ल्याउ आफ्नो प्रकोप जसबाट तिमी हामीलाई तर्साउँछौ । त्यो प्रकोप आयो एवं उनलाई यस्तो घेऱ्यो त्यस पश्चात त्यसबाट उम्कन सकेनन् ।

[४]समीपवर्तीसित आद, समूद, तथा लूतका ती वस्तुहरु अभिप्राय हुन् जो हिज़ाजका समीप नै थिए तथा यमन, शाम तथा फिलिस्तीनतिर आउँदा-जाँदा तिनीबाट उनीहरुको गुज़र हुन्थ्यो ।

[५]अर्थात् हामीले विभिन्न ढङ्गले तथा विभिन्न प्रमाण उनका समक्ष प्रस्तुत गऱ्यौं कि हुनसक्छ उनी क्षमा-याचना गरिहालून् किन्तु उनले कुनै वास्ता गरेन ।

فَلَوْلَا نَصَرَهُمُ الَّذِينَ اتَّخَذُوا مِن دُونِ اللَّهِ قُرْبَانًا آلِهَةً ۖ بَلْ ضَلُّوا عَنْهُمْ ۚ وَذَٰلِكَ إِفْكُهُمْ وَمَا كَانُوا يَفْتَرُونَ ﴿٢٨﴾

(२८) त अल्लाहको निकटता प्राप्त गर्नको लागि उनीहरुले ज-जसलाई देवता बनाएका थिए तिनीहरुले उनको सहायता किन गरेनन् बरु उनी त तिनीहरुबाट गुमिए, बरु (वास्तवमा) यो उनको मात्र झूठ तथा (पूर्णतः) आरोप थियो ।[1]

وَإِذْ صَرَفْنَا إِلَيْكَ نَفَرًا مِّنَ الْجِنِّ يَسْتَمِعُونَ الْقُرْآنَ فَلَمَّا حَضَرُوهُ قَالُوا أَنصِتُوا ۖ فَلَمَّا قُضِيَ وَلَّوْا إِلَىٰ قَوْمِهِم مُّنذِرِينَ ﴿٢٩﴾

(२९) तथा याद गर, जबकि हामीले जिन्नहरुका एक गिरोहलाई तिमीतिर फर्काइदियौं कि उनीहरु कुर्आन सुनुन्, त जब उनी नबीका निकट पुगिहाले त (एक-अर्का) सित भन्नलागे कि शान्त भइहाल,[2] अनि जब पाठ पूरा

[1]अर्थात् जुन उपास्यहरुलाई उनीहरु अल्लाहको निकटताको साधन ठान्थे तिनीहरुले उनको कुनै सहायता गरेनन्, बरु यस अवसरमा उनी आउँदै-आएनन् तथा उनी चूप रहे । यसबाट पनि विदित भयो कि मक्काका मुशिरकहरु मूर्तिहरुलाई ईश्वर मान्दैनथे, बरु उनलाई अल्लाहका सदनमा निकटताको माध्यम ठान्दथे । अल्लाहले यस माध्यमलाई यहाँ झूठा तथा आरोप भनेर बताइदियो कि यो अवैध तथा निषेधित (नाजायज तथा हराम) छ ।

[2]सहीह मुस्लिमको हदीसबाट ज्ञात हुन्छ कि यो घटना मक्काको समीप वादिये नख़लामा घटित भयो, जहाँ सल्लल्लाहु अलैहि व सल्लम त आफ्ना साथीहरुलाई फ़ज्रको नमाज़ पढाइराख्नु भएको थियो । जिन्नहरुलाई यो खोज थियो कि आकाशमा हामीमाथि अत्याधिक कडाई गरिदिएको छ तथा जब त्यहाँ जानु लगभग असम्भव भइसकेछ, कुनै महत्वपूर्ण घटना अवश्य भएको छ जसका कारण यस्तो भएको छ । यसकारण पूर्व एवं पश्चिमका विभिन्न दिशाहरुमा जिन्नहरुका टोली कारणको खोजीमा फैलिए । उनीहरुमध्ये एउटा गिरोहले यो कुर्आन सुन्यो तथा बुझ्यो कि नबी सल्लल्लाहु अलैहि व सल्लमलाई पठाइनुको घटना नै हामीमाथि आकाशमा प्रतिबन्ध छ तथा जिन्नहरुको यो समूह तपाईंमाथि ईमान स्वीकार गऱ्यो र गएर आफ्ना समुदायलाई पनि सूचित गऱ्यो (मुस्लिम, किताबुस्सलात, बाबुल जहरे बिल किराअते फिस्सुबहे वल किराअते अललजिन्न) सही बुख़ारीमा पनि केही कुराको चर्चा छ किताबु मनाकिबिल अंसार बाबु ज़िकिल जिन्न) अन्य उदाहरणहरुबाट ज्ञात हुन्छ कि तत्पश्चात उहाँ सल्लल्लाहु अलैहि व सल्लम जिन्नहरुका आमन्त्रणमा उनका पास पनि जानुभो । तथा गएपश्चात उनीहरुलाई अल्लाहको उपदेश सुनाउनुभयो तथा कैयन् पटक जिन्नहरुको प्रतिनिधि मण्डल उहाँ सल्लल्लाहु अलैहि व सल्लमको सेवामा पनि उपस्थित भयो । (फ़तहुल बारी, तफ़सीर इब्ने कसीर आदि)

भयो[1] त आफ्नो समुदायलाई सावधान गर्नका लागि फर्किहाले ।

قَالُوْا يٰقَوْمَنَآ اِنَّا سَمِعْنَا كِتٰبًا اُنْزِلَ مِنْۢ بَعْدِ مُوْسٰى مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ يَهْدِيْٓ اِلَى الْحَقِّ وَاِلٰى طَرِيْقٍ مُّسْتَقِيْمٍ ﴿٣٠﴾

(३०) भन्नलागे, हे हाम्रा समुदायका मानिसहरु ! हामीले निश्चित रुपमा त्यो किताब सुनेका छौं, जो मूसा (अलैहिस्सलाम) का पश्चात अवतरित गरियो, जो आफूभन्दा पूर्वका किताबहरुको पुष्टि गर्दछ, जो सत्य धर्म एवं सोझो मार्गतिर मार्गदर्शन गर्दछ ।

يٰقَوْمَنَآ اَجِيْبُوْا دَاعِيَ اللّٰهِ وَاٰمِنُوْا بِهٖ يَغْفِرْ لَكُمْ مِّنْ ذُنُوْبِكُمْ وَيُجِرْكُمْ مِّنْ عَذَابٍ اَلِيْمٍ ﴿٣١﴾

(३१) हे हाम्रा समुदायका मानिसहरु ! अल्लाहतिर आमन्त्रित गर्नेबाट भनेको कुरा मान, त्यसमाथि ईमान स्वीकार गर ।[2] त (अल्लाह) तिम्रा केही पाप क्षमा गरिदिनेछ तथा तिमीलाई दुखद यातनाबाट शरण दिनेछ ।[3]

---

[1]अर्थात् उहाँ सल्लल्लाहु अलैहि व सल्लमको तर्फबाट कुरआनको पाठ समाप्त भयो ।

[2]यो जिन्नहरुले आफ्नो जातिलाई नबी सल्लल्लाहु अलैहि व सल्लमको रिसालत (दूतत्व) मा ईमान स्वीकार्नुको आमन्त्रण दिए । यसभन्दा पहिला पवित्र कुरआनका सम्बन्धमा भनियो कि यो तौरातका पश्चात एउटा अरु आकाशीय ग्रन्थ हो जो सत्य धर्म संमार्गतिर मार्गदर्शन गर्दछ ।

[3]यो ईमान स्वीकार्नुका ती लाभ भने जो आख़िरत (परलोक) मा उनीहरुलाई प्राप्त हुनेछन् । مِنْ ذُنُوبِكُم मा مِنْ केहीको अर्थ दिनका लागि हो, अर्थात् केही पाप क्षमा गरिदिनेछ र यी ती पाप हुनेछन् जसका सम्बन्ध अल्लाहका अधिकारसित हुनेछ किनकि भक्तहरुका अधिकार क्षमा गरिने छैन । यो आयत यस कुराको प्रमाण हो कि पुण्य एवं दण्ड तथा आदेश एवं निषेधहरुमा जिन्नहरुका लागि पनि त्यही नियम छ जो मानिसहरुका लागि छ । यस विषयमा विद्वानहरुका बीच मतभेद छ कि अल्लाह तआलाले जिन्नातमा जिन्नहरु मध्येबाट रसूल (सन्देष्टा) पठायो अथवा पठाएन । प्रत्येक्ष कुरआनका आयतबाट ज्ञात हुन्छ कि जिन्नातहरुमध्ये कोही रसूल (ईशदूत) भएन, सबै अम्बिया तथा रसूल मानिसहरुबाट नै भएका छन् ।

﴿ وَمَآ اَرْسَلْنَا مِنْ قَبْلِكَ اِلَّا رِجَالًا نُّوْحِيْٓ اِلَيْهِمْ مِّنْ اَهْلِ الْقُرٰى ﴾

"उहाँ (सल्लल्लाहु अलैहि व सल्लम) भन्दा पूर्व पनि वस्तीवालाहरु मध्येबाट हामीले पुरुषहरुलाई नै पठाउँदै गर्‍यौं जसतिर प्रकाशना अवतरित गर्दथ्यौं । (यूसुफ-१०९)

وَمَن لَّا يُجِبْ دَاعِيَ اللَّهِ فَلَيْسَ بِمُعْجِزٍ فِي الْأَرْضِ وَلَيْسَ لَهُ مِن دُونِهِ أَوْلِيَاءُ ۚ أُولَٰئِكَ فِي ضَلَالٍ مُّبِينٍ ﴿٣٢﴾

(३२) तथा जुन व्यक्तिले अल्लाहतिर आमन्त्रित गर्नेले भनेको कुरा मान्ने छैन त त्यो धर्तीमा कतै (भागेर अल्लाहलाई) विवश गर्न सक्दैन[1] तथा न अल्लाहका अतिरिक्त उसको कोही सहायता गर्ने हुनेछ,[2] यिनीहरु स्पष्ट पथ-भ्रष्टतामा छन् ।

أَوَلَمْ يَرَوْا أَنَّ اللَّهَ الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ وَلَمْ يَعْيَ بِخَلْقِهِنَّ بِقَادِرٍ عَلَىٰ أَن يُحْيِيَ الْمَوْتَىٰ ۚ بَلَىٰ إِنَّهُ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٣٣﴾

(३३) के उनी देख्दैनन् कि जुन अल्लाहले आकाशहरु तथा धर्तीलाई पैदा गऱ्यो तथा उनलाई पैदा गर्नुबाट त्यो थाकेन, त्यो निःसन्देह मृतकहरुलाई जीवित गर्नुको सामर्थ्य राख्दछ ? किन नहोस् ? त्यो निःसन्देह प्रत्येक वस्तुमाथि सामर्थ्य राख्दछ ।[3]

﴿وَمَا أَرْسَلْنَا قَبْلَكَ مِنَ الْمُرْسَلِينَ إِلَّا إِنَّهُمْ لَيَأْكُلُونَ الطَّعَامَ وَيَمْشُونَ فِي الْأَسْوَاقِ﴾

"हामीले तपाईं (सल्लल्लाहु अलैहि व सल्लम) भन्दा पूर्व जति सन्देशवाहक पठायौं सबैले भोजन पनि गर्दथे तथा बजारहरुमा पनि हिंड्डुल गर्थे ।" (अल-फ़ुरक़ान-२०)

यी क़ुरआनी सूत्रहरुबाट स्पष्ट छ कि जति पनि रसूल भए ती मनुष्य थिए । यसकारण के उनीहरु सबै बस्तीमा रहने, बजारहरुमा हिंड्डुल गर्ने तथा सामान्य भोजन गर्नेहरु थिए जो मनुष्यका विशेषताहरु हुन् । यसकारण जुनप्रकार नबी सल्लल्लाहु अलैहि व सल्लम मानवका लागि रसूल थिए तथा हुन्, त्यसैप्रकार जिन्नहरुका रसूल पनि उहाँ रसूल सल्लल्लाहु अलैहि व सल्लम नै हुन् तथा उहाँको उपदेश जिन्नहरुसम्म पुऱ्याउनुको प्रबन्ध गरिएको छ, जस्तो कि पवित्र क़ुरआनका यस स्थानबाट स्पष्ट छ ।

[1]अर्थात् यस्तो हुन सक्दैन कि त्यो धर्तीका विस्तारमा यस्तो हराएर जाओस् कि अल्लाहको पकडमा आउन नसकोस् ।

[2]जो उसलाई अल्लाहको यातनाबाट बचाउन सकून् । अर्थ यो भयो कि म त्यो स्वयं अल्लाहको पकडबाट बच्नुमा समर्थ छु न कुनै अर्काको सहायताबाट यस्तो सम्भव छ ।

[3] رؤيت (रूयत) सित तात्पर्य मनको आँखाले देख्नु हो । अर्थात् के उनीहरुले जानेनन् ألم يتفكروا अथवा ألم يعلموا कि जो अल्लाह आकाश तथा धर्तीको रचयिता हो जसका विस्तार तथा फैलावको सीमा छैन, तथा त्यो उनलाई बनाएर थाकेको पनि छैन । के त्यो मृतकहरुलाई पुनः जीवन प्रदान गर्न सक्दैन, निश्चय गर्न सक्दछ । यसकारण कि त्यो على كل شيء قدير को गुणले युक्त छ ।

وَيَوْمَ يُعْرَضُ الَّذِينَ كَفَرُوا عَلَى النَّارِ ۖ أَلَيْسَ هَٰذَا بِالْحَقِّ ۖ قَالُوا بَلَىٰ وَرَبِّنَا ۚ قَالَ فَذُوقُوا الْعَذَابَ بِمَا كُنتُمْ تَكْفُرُونَ ﴿٣٤﴾

(३४) तथा तिनीहरु जसले कुफ़्र गरे, जुन दिन नरक़का समक्ष ल्याइनेछन् (तथा उनीसित भनिनेछ) कि यो सत्य छैन ? त उत्तर दिनेछन् कि हो, किन होइन ! सौगन्ध छ हाम्रा प्रभुको ! (सत्य छ) ।[1] (अल्लाह तआ़ला) ले भन्नेछ कि अब आफ्ना कुफ़्रका प्रतिफल स्वरुप यातनाका स्वाद चाख ।[2]

فَاصْبِرْ كَمَا صَبَرَ أُولُو الْعَزْمِ مِنَ الرُّسُلِ وَلَا تَسْتَعْجِل لَّهُمْ ۚ كَأَنَّهُمْ يَوْمَ يَرَوْنَ مَا يُوعَدُونَ لَمْ يَلْبَثُوا إِلَّا سَاعَةً مِّن نَّهَارٍ ۚ بَلَاغٌ ۚ فَهَلْ يُهْلَكُ إِلَّا الْقَوْمُ الْفَاسِقُونَ ﴿٣٥﴾

(३५) त (हे पैग़म्बर) तिमी यस्तो धैर्य राख, जस्तो धैर्य साहसी रसूलहरुले राखेका थिए तथा उनका लागि (यातना माँग्नुमा) शीघ्रता नगर,[3] यिनी जुन दिन त्यस यातनालाई देख्नेछन् जसको वचन दिइन्छन् त (यो प्रतीत हुन थाल्नेछ कि) दिनको एक क्षण नै (संसारमा) बसेका थिए,[4] यो हो सन्देश पुऱ्याइदिनु,[5] कुकर्मीहरुका अतिरिक्त कोही नष्ट गरिने छैन ।[6]

[1]त्यहाँ पाप स्वीकार मात्र गर्ने छैनन् बरु यस स्वीकारमाथि सौगन्ध खाएर जोड दिनेछन् । किन्तु त्यस समयको यो स्वीकार व्यर्थका अतिरिक्त के हुनसक्छ ? आँखाले देख्नुका पश्चात स्वीकार होइन त के इन्कार गर्नेछन् ?

[2]यसकारण कि जब मान्नुको समय थियो तब मानेनन् । यो यातना त्यसै कुफ़्र तथा इन्कारको प्रतिफल हो जो अब तिमीले भोग्नु नै छ ।

[3]यो मक्काका काफ़िरहरुका दुराचारका मुक़ाबिलामा नबी सल्लल्लाहु अलैहि व सल्लमलाई सान्त्वना दिइँदैछ तथा धैर्य राख्नुको उपदेश दिइराखिएको छ ।

[4]केयामतको भयानक दृश्य देख्नुका पश्चात उनलाई संसारको जीवन यस्तो प्रतीत हुनेछ जस्तै दिनको मात्र एक क्षण यहाँ गुजारेर गएका छन् ।

[5]यो लुप्त विषयको विधेय हो, अर्थात् هٰذَا الَّذِي وَعَظْتَهُمْ بِهِ بَلَاغٌ यो त्यो सदुपदेश अथवा शिक्षा हो जसलाई पुऱ्याउनु तिम्रो काम हो ।

[6]यस आयतमा पनि ईमानवालाहरुका लागि शुभ-सूचना तथा प्रोत्साहन छ कि पारलौकिक विनाश मात्र ती मानिसहरुको भाग हो जो अल्लाहका अवज्ञाकारी तथा त्यसको सीमा उल्लंघन गर्नेहरु हुन् ।

## सूरतु मुहम्मद-४७

سُوْرَةُ مُحَمَّدٍ

सूरः मुहम्मद* (सल्लल्लाहु अलैहि व सल्लम) मदीनामा अवतरित भएको यसमा ३८ आयतहरु एवं चार रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

اَلَّذِيْنَ كَفَرُوْا وَصَدُّوْا عَنْ سَبِيْلِ اللّٰهِ اَضَلَّ اَعْمَالَهُمْ ①

(१) जसले कुफ्र गरे तथा अल्लाहका मार्गबाट रोके[1] अल्लाहले उनका कर्म व्यर्थ गरिदिए ।[2]

وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَاٰمَنُوْا بِمَا نُزِّلَ عَلٰى مُحَمَّدٍ وَّهُوَ الْحَقُّ مِنْ رَّبِّهِمْ ۙ كَفَّرَ عَنْهُمْ سَيِّاٰتِهِمْ وَاَصْلَحَ بَالَهُمْ ②

(२) तथा जो ईमान स्वीकार गरे एवं सत्कर्म गरे तथा त्यसमा पनि विश्वास गरे जो मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) माथि अवतरित गरिएको छ[3] तथा वास्तवमा उनका प्रभुका तर्फबाट सत्य (धर्म) पनि त्यही हो, अल्लाहले

*यसको दोस्रो नाम 'अलक़िताल' (युद्ध गर्नु) पनि हो ।

[1]केही ज्ञाताहरुले यसबाट अभिप्राय कुरैशका काफ़िर लिएका छन् तथा केहीले अहले किताब (यहूदी एवं इसाईहरुलाई) लिएका छन् किन्तु यो सामान्य छ । यिनका साथ सबै काफ़िर यिनमा सम्मिलित छन् ।

[2] यसको एक अभिप्राय त यो हो कि उनीहरुले नबी सल्लल्लाहु अलैहि व सल्लमका विरोधमा जो षड्यन्त्र रचे अल्लाहले त्यसलाई विफल गरिदियो तथा उनैमाथि त्यसलाई पल्टाइदियो । दोस्रो अभिप्राय यो हो कि उनीहरुमा जे-जति नैतिक चरित्र पाइन्थ्यो जस्तै सम्बन्धिहरुका साथ उपकार, बन्दीहरुलाई स्वतन्त्र गर्नु, अतिथि सत्कार आदि अथवा खानये काअबा तथा हाजीहरुको सेवा । यिनको कुनै प्रतिफल उनीहरुलाई आख़िरत (परलोक) मा प्राप्त हुनेछैन, किनकि बिना ईमानको प्रतिफल तथा पुण्य प्राप्त हुँदैन ।

[3]ईमानमा यद्यपि मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको प्रकाशना अर्थात पवित्र कुरआनमा ईमान स्वीकार्नु पनि सम्मिलित छ, किन्तु त्यसका महत्व तथा प्रधानतालाई अधिक प्रत्यक्ष तथा प्रकट गर्नका लागि त्यसको अलगबाट चर्चा गरिदियो ।

فَشُدُّوا الْوَثَاقَ ۙ فَإِمَّا مَنًّا بَعْدُ وَإِمَّا فِدَاءً حَتَّىٰ تَضَعَ الْحَرْبُ أَوْزَارَهَا ۚ ذَٰلِكَ وَلَوْ يَشَاءُ اللَّهُ لَانْتَصَرَ مِنْهُمْ وَلَٰكِنْ لِيَبْلُوَ بَعْضَكُمْ بِبَعْضٍ ۗ وَالَّذِينَ قُتِلُوا فِي سَبِيلِ اللَّهِ فَلَنْ يُضِلَّ أَعْمَالَهُمْ ④

सुदृढ बन्दीगृहमा कैद गर ।[1] अनि (अधिकार छ कि) उपकार गरेर स्वतन्त्र गरिदेउ[2] अथवा केही अर्थदण्ड लिएर यहाँसम्मकि युद्ध (गर्नेहरु) आफ्ना हथियार राखिदेऊन् ।[3] यही आदेश छ[4] तथा यदि अल्लाहले चाहेको भए त स्वयं नै उनीसित बदला लिइहाल्थे ।[5] परन्तु (उसको इच्छा यो छ) कि तिमीमध्येबाट एउटाको परीक्षा अरुहरुबाट लेओस् ।[6] र जो मानिस अल्लाहका मार्गमा शहीद गरी

[1]अर्थात् ठूलो लडाई तथा उनको अत्याधिक हतका पश्चात जो उनका व्यक्ति अधीनमा हुन्छन् उनीहरुलाई बन्दी बनाइहाल तथा दृढताले जकडेर राख ताकि उनी भाग्न नसकून् ।

[2] مَنٌّ (मन्न) को अभिप्राय हो अर्थदण्ड नलिइकन उपकार स्वरुप मुक्त गरिदिनु तथा فِداء (फ़िदाअ) को भावार्थ हो केही बदला लिएर मुक्त गरिदिनु । बन्दीहरुको विषयमा अधिकार दिएको छ कि स्थितिलाई हेर्दै जे कुरो इस्लाम तथा मुसलमानहरुको लागि अधिक उत्तम छ, त्यो अपनाइयोस् ।

[3]अर्थात् काफिरहरुका साथ लडाईं समाप्त हुनुका पश्चात, अथवा यो अभिप्राय हो कि शत्रु पराजित भई अथवा सन्धि गरी हतियार राखिदेओस् अथवा इस्लाम प्रभावशाली हुनजाओस् तथा कुफ्रको अन्त्य होस् । अभिप्राय यो हो कि जबसम्म यो स्थिति नहोस् काफ़िरहरुका साथ तिम्रो युद्ध जारी रहनेछ, जसमा तिमीले उनलाई हत पनि गर्नेछौ । बन्दीहरुका सम्बन्धमा तिमीलाई उक्त दुबै कुराहरुको अधिकार छ । केही विद्वानहरु भन्दछन् कि यो आयत निरस्त छ तथा हत्या गर्नुका अतिरिक्त कुनै विकल्प शेष छैन, किन्तु सही कुरो यही छ कि यो आयत निरस्त छैन, लागू छ तथा समयका इमाम (प्रमुख) लाई चारै कुराको अधिकार छ, काफ़िरहरुलाई हत गरोस् अथवा बन्दी बनाओस् । बन्दीहरुमध्ये जसलाई चाहन्छ अथवा सबैलाई चाहे उपकार स्वरुप मुक्त गरिदेओस् अथवा अर्थदण्ड लिएर मुक्त गरिदेओस् । (फ़तहुल क़दीर)

[4]अथवा तिमी यसैप्रकार गर अथवा काफ़िरहरुका लागि नियम यही छ ।

[5]अर्थात् काफ़िरहरुलाई विध्वस्त गरी अथवा उनलाई यातनामा पारी परीक्षा देउ अर्थात् तिमीलाई युद्ध गर्नुको आवश्यकता नै हुन्नथियो ।

[6]अर्थात् तिमीलाई एक-अर्काद्वारा परीक्षा लेओस् ताकि त्यो जानोस् कि तिमीमध्ये त्यसको बाटोमा लड्नेवाला को छन्, ताकि उनलाई प्रतिफल एवं पुण्य प्रदान गरोस् तथा उनीद्वारा काफ़िरहरुलाई अपमानित तथा पराजित गरोस् ।

उनका पाप मेटाइदियो[1] तथा उनको अवस्थाको सुधार गरिदियो ।[2]

ذٰلِكَ بِأَنَّ الَّذِيْنَ كَفَرُوا اتَّبَعُوا الْبَاطِلَ وَأَنَّ الَّذِيْنَ اٰمَنُوا اتَّبَعُوا الْحَقَّ مِنْ رَّبِّهِمْ ۗ كَذٰلِكَ يَضْرِبُ اللّٰهُ لِلنَّاسِ اَمْثَالَهُمْ ③

(३) यो[3] यसकारण कि काफ़िरहरुले असत्यको अनुकरण गरे तथा ईमानवालाहरुले त्यस सत्य (धर्म) को अनुसरण गरे, जो उनका पालनकर्ताकातिरबाट छ। अल्लाह (तआला) मानिसहरुलाई उनको दशा यसैप्रकार बताउँछ ।[4]

فَاِذَا لَقِيْتُمُ الَّذِيْنَ كَفَرُوْا فَضَرْبَ الرِّقَابِ ۗ حَتّٰٓى اِذَآ اَثْخَنْتُمُوْهُمْ

(४) त जब काफ़िरहरुसित तिम्रो मुटभेड हुन्छ त गर्दनहरुमाथि प्रहार गर ।[5] यहाँसम्मकि उनीहरुलाई राम्ररी कुल्चिदिन्छ त अब अत्यन्त

[1]अर्थात् ईमान स्वीकार गर्नुका पहिलाका त्रुटिहरुलाई तथा आलस्यलाई क्षमा गरिदियो । जस्तो कि नबी सल्लल्लाहु अलैहि व सल्लमको पनि कथन छ कि इस्लाम पहिलाका सबै पापहरुलाई मेटाइदिन्छ । (सहीह जामे सग़ीर अलबानी)

[2] بَالَهُمْ को अर्थ हो أَمْرَهُمْ ، شَأْنَهُمْ ، حَالَهُمْ सबैको अर्थ लगभग एउटै छ । अभिप्राय यो हो कि उनीहरुलाई पापहरुबाट बचाएर भलाई तथा राम्रोपनाका मार्गमा लगाइदियो, एक मोमिनको स्थितिका सुधारको यही सर्वोत्तम रुप हो । यो अर्थ होइन कि धन सम्पत्तिद्वारा त्यसको दशा सुधारदियो, किनभने प्रत्येक ईमान्दारलाई धन प्राप्त पनि हुँदैन । यसका अतिरिक्त मात्र सांसारिक वैभव तथा धन, स्थिति सुधारको निश्चित साधन पनि होइन, बरु यसबाट स्थितिका बिगाडको अधिक सम्भावना छ । यसकारण नबी सल्लल्लाहु अलैहि व सल्लमले धनको अधिकतालाई रुचाउनु भएन ।

[3] ذٰلِكَ यो (विषय) हो अथवा यसको खबर (विधेय) लुप्त छ अर्थात् कुरो यस्तो छ । यो संकेत हो ती धम्की तथा वाचाहरुतिर जो काफ़िर तथा मोमिनहरुका लागि वर्णित गरिए ।

[4]ताकि मानिस त्यस दुष्परिणामबाट बचुन् जो काफ़िरहरुको भाग्य हो तथा सन्मार्ग अप्नाऊन् जसमा हिंडेर ईमानवाला अनन्त सफलता प्राप्त गर्नेछन् ।

[5]जब दुबै गिरोहहरुको चर्चा गरिदियो त काफ़िरहरु तथा ती किताबवालाहरुसित जोसँग सन्धि छैन, जिहाद गर्नुको आदेश दिइदैछ । हत्या गर्नुको साटो गर्दन छिनाउनुको आदेश दिइयो कि यस अभियुक्तमा काफ़िरहरुका साथ कडाई तथा कठोरताको अधिक प्रदर्शन छ । (फ़तहुल क़दीर)

दिइन्छन् अल्लाहले उनका कर्म कदापि नष्ट गर्नेछैन ।[1]

سَيَهْدِيهِمْ وَيُصْلِحُ بَالَهُمْ ⑤

(५) उनको पथ-प्रदर्शन गर्नेछ तथा उनको अवस्थाको सुधार गरिदिनेछ ।[2]

وَيُدْخِلُهُمُ الْجَنَّةَ عَرَّفَهَا لَهُمْ ⑥

(६) तथा उनलाई त्यस स्वर्गमा लग्नेछ जससित उनीहरुलाई परिचित गरिदिएको छ ।[3]

يَٰٓأَيُّهَا الَّذِينَ آمَنُوٓا إِن تَنصُرُوا اللَّهَ يَنصُرْكُمْ وَيُثَبِّتْ أَقْدَامَكُمْ ⑦

(७) हे ईमानवालाहरु ! यदि तिमी अल्लाह (का धर्म) को सहायता गर्नेछौ त त्यसले तिम्रो सहायता गर्नेछ[4] तथा तिम्रो पाइला सुदृढ गरिदिनेछ ।[5]

وَالَّذِينَ كَفَرُوا فَتَعْسًا لَّهُمْ وَأَضَلَّ أَعْمَالَهُمْ ⑧

(८) तथा जो मानिस काफ़िर भइहाले उनको विनाश होस्, अल्लाहले उनका कर्महरुलाई नष्ट गरिदियो ।

[1]अर्थात् उनको प्रतिकार तथा पुण्य बर्बाद गर्नेछैन ।

[2]अर्थात् उनलाई यस्ता कर्महरुको सौभाग्य दिनेछ जसबाट उनका लागि स्वर्गको मार्ग सरल हुनेछ ।

[3]अर्थात् जसलाई उनी बिना मार्गदर्शन चिन्नेछन् तथा जब उनी स्वर्गमा प्रवेश गर्नेछन् त स्वयं नै आफ्ना आवासहरुमा गइहाल्नेछन् । यसको समर्थन त्यस हदीसमा पनि हुन्छ जसमा नबी सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो : "सौगन्ध छ त्यस अस्तित्वको जसका हातमा मेरो प्राण छ, एक स्वर्गीय (स्वर्गका पात्र) लाई आफ्ना स्वर्गका आवाजका मार्गहरुको त्यसभन्दा कहीं अधिक ज्ञान हुनेछ जति संसारमा उसलाई आफ्ना घरको थियो ।" (सहीह बुख़ारी, किताबुल रिक़ाक, बाबुल किसासे यौमल क़याम:)

[4]अल्लाहको सहायता गर्नुको अभिप्राय अल्लाहका धर्मको सहायता हो, किनकि त्यसले साधनहरुका अनुकूल आफ्ना धर्मको सहायता मोमिन भक्तद्वारा नै गराउँछ । यी मोमिन भक्तहरु अल्लाहका धर्मको रक्षा तथा त्यसको प्रचार-प्रसार गर्दछन् त अल्लाह उनको सहायता गर्दछ अर्थात् उनीहरुलाई काफ़िरहरुमाथि विजय तथा प्रभुत्व प्रदान गर्दछ ।

[5]युद्धका समय تَثْبِيتُ أَقْدَامٍ (पाइलालाई दृढ राख्नु) को अर्थ हो रणक्षेत्रहरुमा सहायता तथा सहयोग । केही ज्ञाताहरु भन्छन् कि इस्लाम अथवा पुल सिरातमा दृढ पाइला राख्नेछ ।

ذٰلِكَ بِاَنَّهُمْ كَرِهُوْا مَاۤ اَنْزَلَ اللّٰهُ فَاَحْبَطَ اَعْمَالَهُمْ ﴿٩﴾

(९) यो यसकारण कि उनी अल्लाहद्वारा अवतरित गरिएको वस्तुसित अप्रसन्न भए,[१] त अल्लाह (तआला) ले पनि उनका कर्म नष्ट गरिदियो ।[२]

اَفَلَمْ يَسِيْرُوْا فِى الْاَرْضِ فَيَنْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ؕ دَمَّرَ اللّٰهُ عَلَيْهِمْ ۫ وَلِلْكٰفِرِيْنَ اَمْثَالُهَا ﴿١٠﴾

(१०) के तिमीहरुले धर्तीमा हिंड्डुल गरी यसको निरीक्षण गरेनन् कि उनीभन्दा पूर्वका मानिसहरुको के परिणाम भयो ?[३] अल्लाहले उनलाई नष्ट गरिदियो तथा काफ़िरहरुका लागि यसैप्रकारका दण्ड छन् ।[४]

ذٰلِكَ بِاَنَّ اللّٰهَ مَوْلَى الَّذِيْنَ اٰمَنُوْا وَاَنَّ الْكٰفِرِيْنَ لَا مَوْلٰى لَهُمْ ﴿١١﴾

(११) त्यो यसकारण कि ईमानवालाहरुको संरक्षक स्वयं अल्लाह (तआला) हो तथा यसकारण कि काफ़िरहरुको कोही संरक्षक छैन ।[५]

اِنَّ اللّٰهَ يُدْخِلُ الَّذِيْنَ اٰمَنُوْا

(१२) जसले ईमान स्वीकार गरे तथा पुण्यका

---

[१]अर्थात् कुर्आन एवं ईमानलाई उनीहरुले अप्रिय ठाने ।

[२]कर्महरुसित तात्पर्य ती कर्म हुन् जो रुपमा राम्रा कर्म हुन् किन्तु ईमान नहुनुका कारण अल्लाहका सदनमा उनको कुनै फल तथा पुण्य प्राप्त हुनेछैन ।

[३]जसका धेरै अवशेष (निशाना) उनका क्षेत्रहरुमा विद्वमान छन् । कुर्आनका अवतरणका समय केही विध्वस्त जातिहरुका भग्नावशेष विद्यमान थिए । अत: उनलाई हिंड्डुल गरी उनका शिक्षाप्रद परिणामलाई हेर्नका निम्ति ध्यान दिलाइएको छ कि उनलाई देखेर नै सम्भवत: ईमान ल्याऊन् ।

[४]यो मक्कावासीहरुलाई तर्साइदैछ कि तिमी कुफ्रबाट रोकिएनौ भने तिमीलाई पनि यस्तै यातना हुनसक्छ तथा विगत काफ़िर समुदायहरुको जस्तै तिमीलाई पनि विध्वस्त गर्न सकिन्छ ।

[५]जस्तो कि ओहुदका रणमा काफ़िरहरुका नाराका उत्तरमा मुसलमानहरुले जो नारा लगाए, जस्तै اعلُ هُبَل، اعلُ هُبَل (हुबलको जय) का उत्तरमा الله اعلى و اجل (अल्लाह नै सर्वोच्च तथा महान छ) । काफ़िरहरुका यिनै नाराहरुमध्ये एउटा नारा لنا العزى ولا عزى لكم का उत्तरमा मुसलमानहरुको नारा थियो الله مولانا ولا مولى لكم "अल्लाह हाम्रो सहायक छ, तिम्रो कोही सहायक छैन ।" (सहीह बुख़ारी, गज़वतुल ओहुद)

وَعَمِلُوا الصّٰلِحٰتِ جَنّٰتٍ تَجْرِیْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ؕ وَالَّذِیْنَ كَفَرُوْا یَتَمَتَّعُوْنَ وَیَاْكُلُوْنَ كَمَا تَاْكُلُ الْاَنْعَامُ وَالنَّارُ مَثْوًى لَّهُمْ ﴿۱۲﴾

कार्य गरे, उनीहरुलाई अल्लाह (तआ़ला) ले निश्चित रुपमा यस्ता बगैंचाहरुमा प्रवेश दिनेछ जसमुनि नहरहरु प्रवाहित छन् तथा जो काफ़िर भए उनी (सांसारिक नै) लाभ उठाइराखेका छन् तथा पशुका समान खाइराखेका छन्,[1] उनको (मुख्य) ठेगाना नरक् हो।

وَكَاَیِّنْ مِّنْ قَرْیَةٍ هِیَ اَشَدُّ قُوَّةً مِّنْ قَرْیَتِكَ الَّتِیْۤ اَخْرَجَتْكَ ۚ اَهْلَكْنٰهُمْ فَلَا نَاصِرَ لَهُمْ ﴿۱۳﴾

(१३) तथा हामीले कति वस्तीहरुलाई जो शक्तिमा तिम्रो यस वस्तीभन्दा अधिक थिए जसबाट तिमीलाई निकाल्यौं । हामीले उनीहरुलाई नष्ट गरिदिएका छौं, जसको सहायता गर्नेवाला कोही उठेन ।

اَفَمَنْ كَانَ عَلٰی بَیِّنَةٍ مِّنْ رَّبِّهٖ كَمَنْ زُیِّنَ لَهٗ سُوْٓءُ عَمَلِهٖ وَاتَّبَعُوْۤا اَهْوَآءَهُمْ ﴿۱۴﴾

(१४) के त त्यो व्यक्ति जो आफ्ना प्रभुका तर्फबाट प्रमाणका साथ छ त्यस व्यक्तिका समान हुनसक्छ, जसका लागि त्यसका नराम्रा कार्य शोभनीय बनाइएका छन् तथा त्यसले आफ्ना इच्छाहरुको अनुसरण गर्दछ ?[2]

[1]अर्थात् जस्तो पशुहरुलाई आहार तथा मैथुनका आवश्यकताहरु पूरा गर्नुका बाहेक कुनै काम हुँदैन, यही दशा काफ़िरहरुको छ। उनका जीवनका उद्देश्य पनि खानु, पिउनुका अतिरिक्त केही छैन, आखिरत (परलोक) बाट उनी निश्चिन्त छन्। यसबाट प्रासंगिक संकेत पाईन्छ कि उभिएर खानु निषेध छ जसको आजकल भोजहरुमा सामान्य चलन छ, किनकि यसमा पनि पशुहरुको जस्तो समानता छ जसलाई काफ़िरहरुको आचरण भनिएको छ। हदीसहरुमा उभिएर पानी पिउनुबाट कडा रुपमा रोकिएको छ, जसबाट उभिएर खानुको मनाही अत्याधिक सिद्ध हुन्छ। अत: पशुहरुका समान उभेर खानुबाट बच्नु अनिवार्य छ।

[2]नराम्रो कर्मसित अभिप्राय शिर्क तथा पाप हो। तात्पर्य त्यही हो जो पहिला अनेक स्थानमा गुज्रिसकेको छ कि मोमिन, काफ़िर, मुश्रिक एकेश्वरवादी, सदाचारी एवं दूराचारी समान हुन सक्दैनन्। एकका लागि अल्लाहका सदनमा राम्रो प्रतिफल तथा स्वर्गका सुख छन्, जबकि अर्कोका लागि नरक्को भयानक दण्ड छ। आगामी आयतमा दुबैको परिणाम भनिंदैछ। पहिला त्यस स्वर्गका राम्रा कुरा तथा विशेषताहरु हुन् जसका वाचा सदाचारीहरुसित छ।

مَثَلُ الْجَنَّةِ الَّتِي وُعِدَ الْمُتَّقُونَ ۖ فِيهَا أَنْهَارٌ مِّن مَّاءٍ غَيْرِ آسِنٍ وَأَنْهَارٌ مِّن لَّبَنٍ لَّمْ يَتَغَيَّرْ طَعْمُهُ وَأَنْهَارٌ مِّنْ خَمْرٍ لَّذَّةٍ لِّلشَّارِبِينَ ۚ وَأَنْهَارٌ مِّنْ عَسَلٍ مُّصَفًّى ۖ وَلَهُمْ فِيهَا مِن كُلِّ الثَّمَرَاتِ

(१५) त्यस स्वर्गको विशेषता जसको वायदा (वाचा) सदाचारीहरुसित गरिएको छ, यो हो कि त्यसमा (शीतल) जलका सरिताहरु प्रवाहित छन्, जो दूर्गन्धित छैनन्[1] तथा दूधका नदीहरु हुन् जसका स्वाद परिवर्तित भएको छैन[2] तथा मदिराका नहरहरु छन् जसमा पिउनेहरुका लागि अत्याधिक स्वाद छन्[3] तथा अत्यन्त स्वच्छ मधुका नहरहरु छन्,[4] तथा

[1] آسـن (आसिन) परिवर्तनशील । غير آسن अर्थात् अपरिवर्तनशील । अर्थात् संसारमा त पानी एक स्थानमा केही बेरसम्म रहेको छ भने त्यसको रङ्ग परिवर्तन हुन्छ तथा त्यसको गन्ध एवं स्वादमा परिवर्तन आउँछ, जसले गर्दा त्यो स्वास्थ्यका लागि हानिकारक हुनजान्छ । स्वर्गका जलको यो विशेषता हुनेछ कि त्यसमा कुनै परिवर्तन हुनेछैन, अर्थात् त्यसको गन्ध तथा स्वादमा कुनै परिवर्तन हुनेछैन; जहिले पिउ ताजा, रुचिकर एवं स्वास्थ्यवर्धक । संसारको पानी जब खराव हुनसक्छ त यसकारण धर्मविधानले जलका विषयमा भनेको छ कि यो त्यस समयसम्म पाक (पवित्र) छ जबसम्म त्यसको रङ्ग, स्वाद अथवा गन्ध परिवर्तित हुँदैन, किनकि रङ्ग वा गन्ध बदल्नुको दशामा पानी अपवित्र (अशुद्ध) भइहाल्नेछ ।

[2] जुनप्रकार संसारमा त्यो दूध कहिले खराब हुनजान्छ जो गाई, भैंसी तथा बाखा आदिहरुका स्तनहरुबाट निस्कन्छ, स्वर्गको दूध किनकि यसप्रकार जीवहरुका थनहरुबाट निस्कने छैन बरु त्यसका नहरहरु हुनेछन्, यसकारण जस्तो त्यो अति स्वादिष्ट हुनेछ खराब हुनुबाट पनि सुरक्षित रहनेछ ।

[3] संसारमा जो मदीरा पाइन्छ, त्यो सामान्यत: तितो कटुस्वाद टर्रो तथा दुर्गन्धित हुन्छ । यसका अतिरिक्त, त्यसलाई पिएर मानिस साधरणत: भ्रान्तमत हुनजान्छ, बकवास गर्दछ तथा आफ्नो शरीर सम्मको ख्याल राख्दैन । स्वर्गको मदिरा देख्नुमा सुन्दर, स्वादमा उत्तम तथा अत्यन्त सुगन्धित हुनेछ, त्यसलाई पिएर कोही मानिस बहकने छैन न कुनै बोझको संवेदन गर्नेछ । बरु यस्तो स्वाद एवं आनन्द महसुस गर्नेछ जसको कल्पना यस संसारमा सम्भव छैन । जस्तै अर्को स्थानमा अल्लाह तआलाले भन्नुभएको छ : ﴿لَا فِيهَا غَوْلٌ وَلَا هُمْ عَنْهَا يُنزَفُونَ﴾

"न त्यसलाई रिंगाउने छ न मति भ्रष्ट हुनेछ ।" (सूर: अस्साफ़्फ़ात-४७)

[4] अर्थात् मधुमा जुन वस्तुहरु मिश्रणको सम्भावना हुन्छ जसलाई संसारमा साधारणत: देखिन्छ स्वर्गमा यस्तो कुनै सम्भावना हुनेछैन, अत्यन्त सफा एवं स्वच्छ हुनेछ, किनकि यो संसारको जस्तो प्राप्त हुनेछैन । बरु त्यसका पनि नहरहरु

وَمَغْفِرَةٌ مِّنْ رَّبِّهِمْ ۭ كَمَنْ هُوَ خَالِدٌ فِى النَّارِ وَسُقُوْا مَاۗءً حَمِيْمًا فَقَطَّعَ اَمْعَاۗءَهُمْ ⑮

उनका लागि त्यहाँ हरप्रकारका फलहरु छन् र उनका प्रभुको तर्फबाट क्षमा छ, के यी त्यसका समतुल्य छन् जो सधैं अग्निमा रहनेछन् तथा जसलाई गरम उम्लिराखेको पानी खुवाइनेछ जो उनका आन्द्रलाई टुक्रा-टुक्रा गरिदिनेछन् ।[1]

وَمِنْهُمْ مَّنْ يَّسْتَمِعُ اِلَيْكَ ۚ حَتّٰٓى اِذَا خَرَجُوْا مِنْ عِنْدِكَ قَالُوْا لِلَّذِيْنَ اُوْتُوا الْعِلْمَ مَاذَا قَالَ اٰنِفًا ۣ اُولٰۗىِٕكَ الَّذِيْنَ طَبَعَ اللّٰهُ عَلٰي قُلُوْبِهِمْ وَاتَّبَعُوْٓا اَهْوَاۗءَهُمْ ⑯

(१६) तथा उनीहरुमा केही (यस्ता पनि छन् कि) तिमीतिर कान लगाउँछन्, यहाँसम्मकि जब तिम्रा छेउबाट जान्छन् त ज्ञानवालाहरुसित (आलस्य एवं भद्दापनका कारण) सोध्छन् कि उसले अहिले के भनेको थियो ?[2] यही मानिसहरु हुन् जसका हृदयमा अल्लाहले मोहर लगाइदिएको छ तथा उनी आफ्ना इच्छाहरुको अनुगमन गर्दछन् ।

وَالَّذِيْنَ اهْتَدَوْا زَادَهُمْ هُدًى

(१७) तथा जो मानिस संमार्ग प्राप्त छन्, अल्लाह

हुनेछन् । यसैकारण हदीसमा वर्णित छ कि नबी सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो जब तिमी प्रार्थना गर्छौ त "जन्नतुल फ़िरदौस" का लागि प्रार्थना गर, यसकारण कि यो स्वर्गको मध्यम तथा सर्वोच्च श्रेणी हो तथा त्यहींबाट स्वर्गका नहरहरु प्रस्फुटित हुन्छन् तथा त्यसका माथि रहमानको आसन छ । (सहीह बुख़ारी किताबुल जिहाद, बाबु दर्जातिल मुजाहिदीन फ़ी सबीलिल्लाह)

[1]अर्थात् जसलाई स्वर्गमा त्यो उच्चतम श्रेणी प्राप्त हुनेछ जसका वर्णन गरियो, के उनी यस्ता नर्कवासीहरुका समान छन् जसको यो दुर्दशा हुनेछ ? स्पष्ट कुरो छ कि यस्तो हुनेछैन । बरु एउटा उच्च स्थानमा हुनेछ तथा दोस्रो नरक़का तहहरुमा, एउटा सुखहरुमा आनन्दित हुनेछ तथा दोस्रो नरक़को कडा यातना भोगिराखेको हुनेछ, एउटा अल्लाहको अतिथि हुनेछ जहाँ विभिन्न प्रकारका सुख-सुविधाहरु उनका अतिथि सत्कारका लागि हुनेछन् तथा दोस्रो बन्दी, जहाँ उसलाई खानका लागि कैक़टस जस्तो स्वादरहित खाना तथा पिउनका लागि उम्लिराखेको पानी पाइनेछ ।

[2]यो मुनाफ़कीन (द्वयवादीहरु) को वर्णन हो । किनकि उनको विचार सही हुँदैनथ्यो, यसकारण नबी सल्लल्लाहु अलैहि व सल्लमका कुराहरु पनि उनलाई समझमा आउँदैनथ्यो । उनी सभाबाट बाहिर आएर प्रश्न गर्दथे कि उहाँ सल्लल्लाहु अलैहि व सल्लमले के भन्नुभयो ?

وَآتَاهُمْ تَقْوَاهُمْ ⑰

(तआला) ले उनीहरुलाई सन्मार्गमा झन् बृद्धि गरिदिएको तथा उनीहरुलाई उनको सदाचार प्रदान गरेको छ ।[1]

فَهَلْ يَنظُرُونَ إِلَّا السَّاعَةَ أَن تَأْتِيَهُم بَغْتَةً ۖ فَقَدْ جَاءَ أَشْرَاطُهَا ۚ فَأَنَّىٰ لَهُمْ إِذَا جَاءَتْهُمْ ذِكْرَاهُمْ ⑱

(१८) त के यिनीहरु केयामतको प्रतीक्षा गरिराखेका छन् कि त्यो उनका पासमा सहसा आइहालोस् । नि:सन्देह त्यसका लक्षण त आइसकेछन्,[2] अनि जब उनका पास केयामत आइहाल्छ उनलाई शिक्षा प्राप्त गर्नु कहाँ हुनेछ ?[3]

فَاعْلَمْ أَنَّهُ لَا إِلَٰهَ إِلَّا اللَّهُ وَاسْتَغْفِرْ لِذَنبِكَ وَلِلْمُؤْمِنِينَ

(१९) त (हे नबी), तपाईं विश्वास गर्नुस् कि अल्लाहका अतिरिक्त कोही (सच्चा) उपास्य छैन[4] तथा आफ्ना पापहरुको क्षमा माँग्दै गर्नुस् तथा

[1]अर्थात् जसका मन संमार्ग प्राप्त गर्ने हुन्छ त अल्लाह उनलाई सन्मति पनि प्रदान गर्छ तथा उनलाई त्यसमाथि अटल पनि राख्दछ ।

[2]अर्थात् नबी सल्लल्लाहु अलैहि व सल्लमलाई पठाइनु स्वयं केयामत समीप हुनुको एउटा लक्षण हो । जस्तो कि उहाँ सल्लल्लाहु अलैहि व सल्लमले पनि भन्नुभयो : «بُعِثْتُ أَنَا وَالسَّاعَةَ كَهَاتَيْنِ»

"मेरो आगमन तथा प्रलय यी दुबै औंलाहरुका समान छन् ।" (सहीह बुख़ारी, तफ़सीर सूर: नाज़िआत)

उहाँ सल्लल्लाहु अलैहि व सल्लमले इसारा गरेर स्पष्ट गरिदिनु भयो कि जुनप्रकार यी दुबै औंलाहरु परस्पर जोडिएका छन्, त्यसैप्रकार मेरा तथा केयामतका मध्ये दूरी छैन । अथवा यो कि जस्तो एउटा औंला अर्को औंलाबाट अलिकति अगाडी छ यसैप्रकार केयामत म भन्दा अलि पछि छ ।

[3]अर्थात् जब केयामत सहसा आइहाल्नेछ त काफ़िर कसरी शिक्षा ग्रहण गर्नेछन् ? तात्पर्य यो हो कि त्यस समय उनी यदि क्षमा पनि माँग्नेछन् त स्वीकार्य हुनेछैन । अत: यदि तौबा (क्षमा-याचना) गर्नुछ त यही समय हो, अन्यथा त्यो समय पनि आउनसक्छ कि उनको तौबा पनि लाभप्रद हुनेछैन ।

[4]अर्थात् यस विश्वासमा अडिग तथा स्थिर रहनुस्, किनकि यही तौहीद तथा अल्लाहको आज्ञापालन भलाईको मूलाधार हो तथा यसबाट हट्नु अर्थात् शीर्क तथा अवज्ञा राम्रो कुराको मूलाधार हो ।

وَالْمُؤْمِنٰتِ ۗ وَاللّٰهُ يَعْلَمُ مُتَقَلَّبَكُمْ وَمَثْوٰىكُمْ ﴿١٩﴾

ईमानवाला पुरुषहरु एवं ईमान भएका महिलाहरुका पक्षमा पनि ।[1] अल्लाह (तआला) तिम्रा आवागमन तथा निवासस्थानलाई राम्ररी जान्दछ ।[2]

وَيَقُوْلُ الَّذِيْنَ اٰمَنُوْا لَوْلَا نُزِّلَتْ سُوْرَةٌ ۚ فَاِذَآ اُنْزِلَتْ سُوْرَةٌ مُّحْكَمَةٌ وَّذُكِرَ فِيْهَا الْقِتَالُ ۙ رَاَيْتَ الَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ يَّنْظُرُوْنَ اِلَيْكَ نَظَرَ الْمَغْشِيِّ عَلَيْهِ مِنَ الْمَوْتِ ۗ فَاَوْلٰى لَهُمْ ﴿٢٠﴾

(२०) तथा जो मानिस ईमान स्वीकार गरे उनीहरु भन्छन् कि कुनै सूर: किन अवतरित गरिएन,[3] अनि जब कुनै स्पष्ट अर्थ भएको सूर:[4] अवतरित भइहाल्छ तथा त्यसमा धर्मयुद्धको वर्णन गरिन्छ, त तपाईं देख्नुहुन्छ कि जसका हृदयमा रोग छ, तिनीहरु तपाईंतिर यसप्रकार देख्दछन् कि जस्तै त्यस व्यक्तिको दृष्टि हुन्छ जो मृत्युसित मूर्छित भइसकेको छ,[5] बस अति उत्तम थियो उनका लागि ।

---

यसमा नबी सल्लल्लाहु अलैहि व सल्लमलाई क्षमा माँग्नुको आदेश दिएको छ । आफ्ना लागि पनि तथा ईमान्दारहरुका लागि पनि । इस्तिग़फ़ार (क्षमा माँग्नु) को बडो महत्व तथा प्रधानता छ । हदीसहरुमा यसमाथि बडो जोड दिएको छ । एक हदीस (कथन) मा नबी सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो:

«يَاأَيُّهَا النَّاسُ! تُوبُوا إِلَى رَبِّكُمْ فَإِنِّي أَسْتَغْفِرُ اللهَ وَأَتُوبُ إِلَيْهِ فِي الْيَوْمِ أَكْثَرَ مِنْ سَبْعِينَ مَرَّةً»

"मानिसहरु अल्लाहसित तौबा एवं इस्तिग़फ़ार (क्षमा-याचना) गर्नेगर, म पनि अल्लाहसित प्रतिदिन सत्तरी पटकभन्दा अधिक तौबा-इस्तिग़फ़ार गर्दछु ।" (सहीह बुख़ारी, बाबु इस्तिग़फ़ारिन नबीये फिल यौमि वल लैलति)

[2]अर्थात् दिनमा तिमी जहाँ डुल्छौ तथा जे-जति गर्दछौ र रातमा जहाँ विश्राम गर्दछौ यो स्थान ग्रहण गर्दछौ, अल्लाह तआला जान्दछ । अर्थ यो हो कि रात-दिनको कुनै गतिविधि अल्लाहसित लुकेको छैन ।

[3]जब जिहाद (धर्मयुद्ध) को आदेश उत्रेको थिएन त जो मुसलमान जिहादको भावनाले पूर्ण थिए, जिहादमा रुचि राख्दथे तथा भन्दथे कि यस विषयमा कुनै सूर: किन अवतरित गरिँदैन ? अर्थात् जसमा जिहादको अनुमति होस् ।

[4]अर्थात् यस्तो सूर: जो निरस्त नहोस् ।

[5]यो ती अवसरवादीहरुको चर्चा हो जसलाई जिहादको आदेश बडो कठिन लाग्दथ्यो । उनीहरुमा कहिले कम ईमान भएकाहरु पनि सम्मिलित हुनजान्थे । सूर: निसा आयत ७७ मा पनि यो विषय वर्णित छ ।

طَاعَةٌ وَقَوْلٌ مَعْرُوفٌ ۚ فَإِذَا عَزَمَ الْأَمْرُ فَلَوْ صَدَقُوا اللَّهَ لَكَانَ خَيْرًا لَهُمْ ﴿٢١﴾

(२१) आज्ञापालन गर्नु तथा राम्रा कुरा भन्नु,[1] अनि जब कार्य निर्धारित भइसकेको हुन्छ,[2] त यदि उनीहरु अल्लाहका साथ सच्चा रहन्छन्[3] त उनका लागि राम्रोपना छ ।[4]

فَهَلْ عَسَيْتُمْ إِنْ تَوَلَّيْتُمْ أَنْ تُفْسِدُوا فِي الْأَرْضِ وَتُقَطِّعُوا أَرْحَامَكُمْ ﴿٢٢﴾

(२२) तथा तिमीसित यो पनि टाढा (असम्भव) छैन कि यदि तिमीलाई राज्य प्राप्त हुन्छ त तिमी धर्तीमा उपद्रव उत्पन्न गरिदेउ[5] तथा रिश्ता-नाता तोडिदेउ ।



[1]अर्थात् ज़िहादका आदेशबाट घबराउनुको साटो उत्तम थियो कि सुन्नु तथा मान्नुको प्रदर्शन गर्दथे तथा नबी सल्लल्लाहु अलैहि व सल्लमका सम्बन्धमा असभ्यको ठाउँमा राम्रो कुरा भन्दथे । यो أولى (औला) أجدر (अजदर) का अर्थमा छ जसलाई इब्ने कसीरले अपनाएका छन् । केही ज्ञाताहरुले أولى (औला) लाई धम्की एवं चेतावनीका शब्द अर्थात् अभिशाप मानेका छन् । अर्थ हो उनको विनाश निकट छ, अभिप्राय हो उनको कायरता तथा अवसरवाद उनका विनाशको कारण बन्नेछ । यस आधारमा طَاعَةٌ وَقَوْلٌ مَعْرُوفٌ पूर्ववर्ती वाक्य हुनेछ तथा त्यसको विधेय लुप्त हुनेछ, خَيْرٌ لَكُمْ । (फ़तहुल क़दीर, ऐसरुत्तफ़ासीर)

[2]अर्थात् ज़िहादको तयारी पूरा होस् तथा ज़िहादको समय आइहालोस् ।

[3]अर्थात् अहिलेपनि अवसरवादलाई त्यागेर आफ्ना मनलाई अल्लाहका लागि शुद्ध गरिहाल अथवा रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमसँग जो लड्नुको प्रतिज्ञा गर्दछन्, त्यसमा अल्लाहका साथ सच्चा रहून् ।

[4]अर्थात् अवसरवाद तथा विरोधका मुक़ाबिलामा क्षमा-याचना तथा विशुद्धताको प्रदर्शन उत्तम छ ।

[5]एक-अर्काको हत्या गरेर, अर्थात् अधिकार तथा आधिपत्यको गलत प्रयोग गर । इमाम इब्ने कसीरले تَوَلَّيْتُمْ को अनुवाद गरेका छन् । “तिमी ज़िहाद (धर्मयुद्ध) बाट फर्किजाउ तथा त्यसबाट विमुख भईहाल ।” अर्थात् फेरि तिमी मूर्खताका युगतिर फर्केर जाउ तथा परस्पर रक्तपात तथा सम्बन्ध विच्छेद गर । यसमा धर्तीमा उपद्रवको साधारणतः तथा नाता तोड्नुको विशेष रुपमा निषेध छ र धर्तीमा सुधार एवं नाता जोड्नमाथि बल दिएको छ, जसको अभिप्राय हो कि सम्बन्धिहरुको साथ, कर्मले तथा धन व्यय गरेर राम्रो व्यवहार गर । हदीसहरुमा पनि यसमा निकै जोड दिएको छ तथा यसको निकै प्रधानता वर्णित छ ।

أُولَٰٓئِكَ ٱلَّذِينَ لَعَنَهُمُ ٱللَّهُ فَأَصَمَّهُمْ وَأَعْمَىٰٓ أَبْصَٰرَهُمْ ﴿٢٣﴾

(२३) यी ती नै मानिस हुन् जसमाथि अल्लाहको धिक्कार छ तथा (अल्लाहले) जसको सुन्ने शक्ति तथा आँखाको ज्योति खोसिहालेको छ ।[1]

أَفَلَا يَتَدَبَّرُونَ ٱلْقُرْءَانَ أَمْ عَلَىٰ قُلُوبٍ أَقْفَالُهَآ ﴿٢٤﴾

(२४) के यिनी कुर्आनमा चिन्तन-मनन गर्दैनन् ? अथवा उनका हृदयहरुमा उनका ताल्चाहरु लागिसकेका छन् ?[2]

إِنَّ ٱلَّذِينَ ٱرْتَدُّوا۟ عَلَىٰٓ أَدْبَٰرِهِم مِّنۢ بَعْدِ مَا تَبَيَّنَ لَهُمُ ٱلْهُدَى ۙ ٱلشَّيْطَٰنُ سَوَّلَ لَهُمْ وَأَمْلَىٰ لَهُمْ ﴿٢٥﴾

(२५) जो मानिस आफ्ना पिठ्यूँका बल फर्किहाले यसका पश्चात कि उनका लागि मार्गदर्शन स्पष्ट भइसक्यो ।[3] निःसन्देह शैतानले उनका लागि (उनका कार्यहरुलाई) शोभनीय गरिदिएको छ तथा उनलाई छुट दिएको छ ।[4]

ذَٰلِكَ بِأَنَّهُمْ قَالُوا۟ لِلَّذِينَ كَرِهُوا۟ مَا نَزَّلَ ٱللَّهُ سَنُطِيعُكُمْ

(२६) यो यसकारण[5] कि उनीहरुले ती मानिसहरुसित जसले अल्लाहबाट अवतरित गरिएको (प्रकाशना) लाई नराम्रो ठाने,[6] यो भने कि हामीले पनि निकट

[1]अर्थात् यस्ता मानिसहरुका कानहरुलाई (सत्य सुन्नुबाट) बहिरा तथा आँखालाई (सत्य देख्नुबाट) अन्धो गरिदिएको छ, जुन यो परिणाम हो उनका उपरोक्त कुकर्महरुको ।

[2]जसका कारण कुर्आनका अर्थ तथा भावार्थ उनका हृदयहरुका भित्र जाँदैनन् ।

[3]यसवाट अभिप्राय मुनाफ़िक़ीन (द्वयवादी) नै हुन्, जसले जिहाद (धर्मयुद्ध) बाट भागेर कुफ्र तथा धर्म परिवर्तनलाई व्यक्त गरिदिए ।

[4]यस क्रियाको कर्ता पनि शैतान हो । अर्थात् مَدَّلَهُمْ فِي الأَمَلِ و وَعَدَهُمْ طُولَ العُمرِ अर्थात् उनीहरुलाई लामो कामनाहरु तथा यस धोकामा पारिदिएको छ कि अहिले त तिम्रो लामो आयु छ, किन लडाईंमा आफ्ना प्राण गुमाउँदैछौ ? अथवा कर्ता अल्लाह हो, अल्लाहले उनलाई छुट दियो अर्थात तुरुन्त उनलाई समातेन ।

[5]'यिनीहरु' सित तात्पर्य उनको इस्लाम धर्मबाट विमुख हुनु हो ।

[6]अर्थात् अवसरवादीहरुले मुश्रिकहरुसित अथवा यहूदीहरुसित भने ।

فِي بَعْضِ الْأَمْرِ ۖ وَاللَّهُ يَعْلَمُ إِسْرَارَهُمْ ﴿٢٦﴾

भविष्यमा केही कार्यहरुमा[1] तिमीले भनेको मान्नेछौं, तथा अल्लाह उनका गुप्त कुराहरुलाई राम्ररी जान्दछ ।[2]

فَكَيْفَ إِذَا تَوَفَّتْهُمُ الْمَلَائِكَةُ يَضْرِبُونَ وُجُوهَهُمْ وَأَدْبَارَهُمْ ﴿٢٧﴾

(२७) त उनको कस्तो (दुर्गत) हुनेछ, जब फरिश्ताहरु उनका प्राण निकाल्दै उनका मुख तथा कम्मरमा हान्नेछन् ।[3]

ذَٰلِكَ بِأَنَّهُمُ اتَّبَعُوا مَا أَسْخَطَ اللَّهَ وَكَرِهُوا رِضْوَانَهُ فَأَحْبَطَ أَعْمَالَهُمْ ﴿٢٨﴾

(२८) यो यसकारण कि यिनीहरु त्यस मार्गमा हिंडे जसबाट (उनीहरुले) अल्लाह (तआ़ला) लाई क्रोधित गरिदिए तथा उनीहरुले त्यसको प्रसन्नतालाई नराम्रो जाने त अल्लाहले उनका कर्महरुलाई अकारक (व्यर्थ) गरिदियो ।

أَمْ حَسِبَ الَّذِينَ فِي قُلُوبِهِم مَّرَضٌ أَن لَّن يُخْرِجَ اللَّهُ أَضْغَانَهُمْ ﴿٢٩﴾

(२९) के उनीहरुले जसका हृदयहरुमा रोग छ यो ठानेछन् कि अल्लाह उनका कपटलाई प्रकट नै गर्नेछैन ।[4]

---

[1] अर्थात् नबी सल्लल्लाहु अलैहि व सल्लम तथा उहाँका ल्याइएको धर्मको विरोधमा ।

[2] जस्तो अर्को स्थानमा अल्लाहले भन्नुभयो :

﴿وَاللَّهُ يَكْتُبُ مَا يُبَيِّتُونَ﴾

"अल्लाह उनका रात्रिहरुको कुराकानी लेखिराखेको छ ।" (अन-निसा-८१)

[3] यो काफिरहरुको त्यस समयको स्थिति वर्णन गरिएको छ जब फरिश्ता (यमदूत) उनका प्राण निकाल्छन् । प्राण फरिश्ताहरुबाट बाँच्नका लागि शरीरमा लुक्छन् तथा यताउता भाग्छन् त फरिश्ताहरु कडाईका साथ त्यसलाई समात्छन्, खिच्छन् र हान्दछन् । यो विषय यसभन्दा पहिला सूरः अनआम-९३ तथा सूरः अंफाल-५० मा गुज्रिसकेको छ ।

[4] أَضْغَان (अज़ग़ान) ضِغْن (जिग्न) को बहुवचन हो । जसको अर्थ द्वेष, कपट तथा बैर हो । मुनाफ़िकहरु (अवसरवादीहरु) का हृदयमा इस्लाम तथा मुसलमानहरुका विरोधमा जो ईर्ष्या तथा द्वेष थियो, त्यसका परिप्रेक्ष्यमा भनिंदैछ कि के यिनीहरु ठान्दछन् कि अल्लाह तआ़ला त्यसलाई व्यक्त गर्नमा समर्थ छैन ?

وَلَوْ نَشَآءُ لَأَرَيْنَٰكَهُمْ فَلَعَرَفْتَهُم بِسِيمَٰهُمْ ۚ وَلَتَعْرِفَنَّهُمْ فِى لَحْنِ ٱلْقَوْلِ ۚ وَٱللَّهُ يَعْلَمُ أَعْمَٰلَكُمْ ﴿٣٠﴾

(३०) तथा यदि हामीले चाहेको भए त ती सबैलाई तिमीलाई देखाइदिन्थ्यौं त तिमी उनका मुखबाटै उनलाई चिनिहाल्थ्यौ,[1] तथा निःसन्देह तिमी उनीहरुलाई उनको कुराका तरीकाबाट चिनिहाल्नेछौ,[2] तिम्रा सारा कार्य अल्लाहलाई ज्ञात छ ।

وَلَنَبْلُوَنَّكُمْ حَتَّىٰ نَعْلَمَ ٱلْمُجَٰهِدِينَ مِنكُمْ وَٱلصَّٰبِرِينَ وَنَبْلُوَا۟ أَخْبَارَكُمْ ﴿٣١﴾

(३१) निःसन्देह हामीले तिम्रो परीक्षा लिनेछौं ताकि तिमीमध्ये धर्मयुद्ध गर्नेहरु तथा धैर्य राख्नेहरुलाई देखिहालूँ । तथा हामी तिम्रा अवस्थाहरुको पनि निरीक्षण गरिहालौं ।[3]

إِنَّ ٱلَّذِينَ كَفَرُوا۟ وَصَدُّوا۟ عَن سَبِيلِ ٱللَّهِ وَشَآقُّوا۟ ٱلرَّسُولَ مِنۢ بَعْدِ مَا تَبَيَّنَ لَهُمُ ٱلْهُدَىٰ لَن يَضُرُّوا۟ ٱللَّهَ شَيْـًٔا

(३२) निःसन्देह जसले कुफ्र गरे अल्लाहका मार्गबाट मानिसहरुलाई रोके तथा रसूलको विरोध गरे यसका पश्चात कि उनका लागि मार्गदर्शन स्पष्ट भइसक्यो, यिनी कहिल्यै अल्लाहको कुनै हानि

---

[1]अर्थात् एक-एक व्यक्तिको चिन्ह प्रकार बनाइदिन्थ्यौं कि प्रत्येक मुनाफ़िकलाई देखेर स्पष्टरुपले चिनिहालिन्थ्यो । किन्तु सबै मुनाफ़िकहरु (द्वयवादीहरु) का लागि अल्लाहले यस्तो यसकारण गरेन कि यो अल्लाहका लागि दोषहरुमाथि पर्दा हाल्नुका गुणका लागि प्रतिकूल छ । त्यो साधारणतः पर्दा हाल्दछ, पर्दाफास गर्दैन । दोस्रो, उसले मानिसहरुलाई प्रत्यक्षमा निर्णय गर्नुको तथा अन्तःकरणका मामिलालाई अल्लाहलाई सुम्पिन आदेश दिएको छ ।

[2]हो, त्यसको शैली तथा कुरा गर्नुको ढङ्ग नै यस्तो हुन्छ जो उनका अन्तःकरणको संकेत हुन्छ, जसबाट त्यसलाई पैग़म्बर त अवश्य चिन्न सक्दछ । यो साधारणतः देखिन्छ कि इन्सानका मनमा जे-जति हुन्छ, त्यसले त्यसलाई जति लुकाओस् किन्तु उसको कुरा, चाल-चलन तथा केही विशेष स्थितिहरु उसका मनका भेदलाई व्यक्त गरिदिन्छन् ।

[3]अल्लाह तआलाका ज्ञानमा त पहिलादेखि सबै कुरा छ । यहाँ ज्ञानसित अभिप्राय त्यो घटित एवं प्रकट हुनु हो ताकि अरुहरुले पनि जानून् तथा देखिहालून् । इमाम इब्ने कसीरले यसको भावार्थ वर्णन गरेका छन् | حتى نعلم وقوعه 'हामी त्यसका हुनुलाई जानीहाल ।' इब्ने अब्बास रज़ीयल्लाहु अन्हुमा यसप्रकारका शब्दहरुको अनुवाद गर्नुहुन्थ्यो لنرى ताकि हामीले देखिहालौं (इब्ने कसीर) र यही अर्थ अधिक शुद्ध छ ।

وَسَيُحْبِطُ أَعْمَالَهُمْ ﴿٣٢﴾

गर्ने छैनन् ।[1] शीघ्र नै उनका कर्म त्यसले नष्ट गरिदिनेछ ।[2]

يَا أَيُّهَا الَّذِينَ آمَنُوا أَطِيعُوا اللَّهَ وَأَطِيعُوا الرَّسُولَ وَلَا تُبْطِلُوا أَعْمَالَكُمْ ﴿٣٣﴾

(३३) हे ईमानवालाहरु ! अल्लाहको आज्ञापालन गर तथा रसूलले भनेको कुरा मान तथा आफ्ना कर्महरुलाई नाश नगर ।[3]

إِنَّ الَّذِينَ كَفَرُوا وَصَدُّوا عَن سَبِيلِ اللَّهِ ثُمَّ مَاتُوا وَهُمْ كُفَّارٌ فَلَن يَغْفِرَ اللَّهُ لَهُمْ ﴿٣٤﴾

(३४) नि:सन्देह जसले कुफ्र गरे तथा अल्लाहका मार्गबाट (अरुहरुलाई) रोके, अनि कुफ्रकै अवस्थामा मरे (विश्वास गर कि) अल्लाहले उनलाई कदापि क्षमा गर्नेछैन ।

فَلَا تَهِنُوا وَتَدْعُوا إِلَى السَّلْمِ وَأَنتُمُ الْأَعْلَوْنَ وَاللَّهُ مَعَكُمْ

(३५) त तिमी क्षीण बनेर सन्धिको प्रार्थनामा नभ्रुर जबकि तिमी नै (विजयी एवं) उच्च रहनेछौ ।[4] तथा अल्लाह तिम्रो साथमा

---

[1]बरु आफ्नै ठूलो क्षति बेहोर्नेछन् ।

[2]किनकि बिना ईमान अल्लाहका निकट कुनै कर्मको कुनै महत्व छैन । ईमान तथा शुद्धता नै कुनै पनि राम्रा कर्मलाई यस योग्य बनाइदिन्छ कि अल्लाहका निकट त्यसको पुण्य प्राप्त होस् ।

[3]अर्थात् मुनाफ़िक तथा धर्मभ्रष्टहरुको जस्तो द्वयवाद तथा धर्मभ्रष्ट गरेर आफ्ना कर्महरुलाई नष्ट नगर । यो मानौं इस्लाममा स्थिर (अडिग) रहनुको आदेश हो । केही ज्ञाताहरुले पाप तथा कुकर्मलाई पनि कर्म नष्ट हुनुको कारण भनेका छन् । यसैकारण मोमिनहरुका गुणहरुमा एउटा गुण यो पनि वर्णन गरिएको छ कि उनीहरु पाप तथा कुकर्मबाट पन्छिन्छन् । (अन्नज्म-३२) यस आधारमा यसमा पाप तथा कुकर्मबाट पन्छिनुमाथि जोड छ । यस आयतबाट यो पनि ज्ञात भयो कि कुनै कर्म जति उत्तम किन नदेखियोस् । यदि अल्लाह तथा त्यसका रसूल सल्लल्लाहु अलैहि व सल्लमका आज्ञा पालनको परिधिभन्दा बाहिर छन् भने व्यर्थ तथा अकारथ छन् ।

[4]अभिप्राय यो हो कि जब तिमी संख्या तथा शक्तिमा शत्रुमाथि प्रभुत्वशाली तथा उच्च छौ भने यस्तो दशामा काफ़िरहरुका साथ सन्धि तथा निर्बलताको प्रदर्शन नगर, बरु कुफ्रमा यस्तो कडा प्रहार गर कि अल्लाहको धर्म उच्च हुनजाओस् । प्रभुत्वशाली तथा भारी हुँदाहुँदै कुफ्रसँग सन्धिको अभिप्राय कुफ्रका प्रभावलाई

وَلَنْ يَتِرَكُمْ أَعْمَالَكُمْ ﴿٣٥﴾

छ ।[1] (आफ्ना ज्ञानद्वारा) असम्भव छ कि त्यसले तिम्रा कर्म नष्ट गरिदेओस् ।[2]

إِنَّمَا الْحَيَوٰةُ الدُّنْيَا لَعِبٌ وَلَهْوٌ ۚ وَإِن تُؤْمِنُوا وَتَتَّقُوا يُؤْتِكُمْ أُجُورَكُمْ وَلَا يَسْـَٔلْكُمْ أَمْوَالَكُمْ ﴿٣٦﴾

(३६) वास्तवमा सांसारिक जीवन त खेलकूद हो,[3] तथा यदि तिमीले ईमान स्वीकार गर्नेछौ तथा संयम अपनाउनेछौ भने अल्लाहले तिमीलाई तिम्रा कर्मफल दिनेछ तथा त्यो तिमीसित तिम्रा धन माँग्दैन ।[4]

إِن يَسْـَٔلْكُمُوهَا فَيُحْفِكُمْ تَبْخَلُوا وَيُخْرِجْ أَضْغَانَكُمْ ﴿٣٧﴾

(३७) यदि त्यसले तिमीसित तिम्रो धन माँग्दछ तथा जोड दिएर माँग्छ भने त तिनी त्यसबाट कंजुसी गर्नथाल्छौ तथा त्यसले तिम्रा खोटलाई प्रकट

---

बढाउनमा सहायता दिनु हो । यो एउटा ठूलो अपराध हो । यसको मतलब यो होइन कि काफ़िरहरुका साथ सन्धि गर्नुको अनुमति छैन । त्यो अनुमति निश्चित रुपमा छ किन्तु प्रत्येक समयमा होइन, मात्र त्यस समय जब मुसलमान संख्यामा कम तथा साधनहरुमा तल होऊन् । यस्तो अवस्थामा लडाईंको अपेक्षा सन्धिमा अधिक लाभ छ ताकि यस अवसरको लाभ प्राप्त गरी मुसलमान पूर्ण तयारी गरिहालून्, जस्तै नबी सल्लल्लाहु अलैहि व सल्लमले मक्काका नास्तिकहरुसित युद्ध नगर्नुको दस वर्षका लागि सम्झौता गर्नुभएको थियो ।

[1]यसमा मुसलमानहरुका लागि काफ़िरहरुमाथि ठूलो विजय तथा सहायताको शुभ-सूचना हो । जसका साथमा अल्लाह छ त्यसलाई कसले पराजित गर्नसक्छ ?

[2]अपितु त्यसले त्यसमा पूरा फल दिनेछ तथा त्यसमा कुनै कमी गर्ने छैन ।

[3]अर्थात् एउटा धोका हो । त्यसको कुनै कुराको अधिकार छन् उसलाई स्थिरता र न उसको विश्वास ।

[4]अर्थात् त्यो तिम्रा धनहरुबाट निस्पृह छ । यसकारण उसले ज़कात (धर्मदान) मा तिमीसित पूरा मालको माँग गरेको छैन । बरु एक अति अल्पभागको अर्थात् केवल साढे दुई प्रतिशतको, त्यो पनि एक वर्षका पश्चात आफ्नो आवश्यकताभन्दा अधिक भएमा । यसका अतिरिक्त त्यसको उद्देश्य पनि आफ्नै भाइ-बन्धुहरुको सहायता तथा हित हो न कि अल्लाह तिम्रा मालबाट आफ्ना राज्यको खर्च पूरा गर्दछ ।

गरिदिनेछ ।[१]

(३८) सावधान ! तिमी ती मानिस हौ कि अल्लाहका मार्गमा खर्च गर्नका लागि बोलाइन्छौ[२] त तिमीमध्येबाट केही कन्जुसी गर्न थाल्छन्,[३] तथा जो कंजुसी गर्दछ त्यो वस्तुतः स्वयं आफूबाट कंजूसी गर्दछ । अल्लाह (तआला) निस्पृह छ तथा तिमी मुहताज (निमुखा) हौ,[४] तथा यदि तिमी विमुख भइहाल्छौ[५] त त्यसले तिम्रा साटो अन्य मानिसहरुलाई ल्याउनेछ जो फेरि तिमीजस्ता हुने छैनन् ।[६]

هَٰٓأَنتُمْ هَٰٓؤُلَآءِ تُدْعَوْنَ لِتُنفِقُوا۟ فِى سَبِيلِ ٱللَّهِ فَمِنكُم مَّن يَبْخَلُ ۖ وَمَن يَبْخَلْ فَإِنَّمَا يَبْخَلُ عَن نَّفْسِهِۦ ۚ وَٱللَّهُ ٱلْغَنِىُّ وَأَنتُمُ ٱلْفُقَرَآءُ ۚ وَإِن تَتَوَلَّوْا۟ يَسْتَبْدِلْ قَوْمًا غَيْرَكُمْ ثُمَّ لَا يَكُونُوٓا۟ أَمْثَٰلَكُم ﴿٣٨﴾

[१]अर्थात् यदि आवश्यकताभन्दा अधिक पूरा मालको माग गर्दछ, त्यो पनि दुराग्रहका साथ जोड दिएर त यो मानवीय स्वभाव हो कि तिमीले पनि कंजूसी गर्नेछौ तथा इस्लामका विरुद्ध आफ्नो शत्रुता एवं वैरभावको प्रदर्शन पनि ।

[२]अर्थात् केही भाग ज़कात स्वरुप तथा केही अल्लाहका मार्गमा खर्च गर ।

[३]अर्थात् स्वयंलाई नै अल्लाहको मार्गमा खर्च गर्नुका पुण्यबाट बञ्चित राख्दछ ।

[४]अर्थात् अल्लाह तिमीलाई खर्च गर्नुको प्रलोभन (प्रोत्साहन) यसकारण दिंदैन कि तिम्रो मालको आवश्यकता छैन । होइन, त्यो त अपेक्षामुक्त, निस्पृह छ । त्यो त तिम्रै लाभका लागि यो आज्ञा दिन्छ कि एक त तिम्रा आफ्नै मनको शुद्धि होस् । दोस्रो, निर्धनहरुको आवश्यकता पूरा होस् । तेस्रो, तिमी शत्रुमाथि प्रभावशाली तथा उच्च रह । अतः अल्लाहको सहायता एवं दयाको आवश्यकता तिमीलाई छ, न कि अल्लाहलाई ।

[५]अर्थात् इस्लामबाट कुफ्रतिर फर्केर जाउ ।

[६]अपितु तिमीभन्दा अधिक अल्लाह तथा रसूलका आज्ञापालक तथा अल्लाहको मार्गमा खर्च गर्नेहरु हुनेछन् । नबी सल्लल्लाहु अलैहि व सल्लमसित उनका विषयमा सोधियो त उहाँले आदरणीय सलमान फारसी रज़ीयल्लाहु अन्हुका काँधमा हात राखेर भन्नुभयो: "यसबाट अभिप्राय यो तथा यसको जाति हो । सौगन्ध छ त्यसको जसका हातमा मेरो प्राण छ, यदि ईमान सुरैया (कृत्तिका) नक्षत्र त (तारा) मा छ भने त्यसलाई फ़ारसका केही मानिसले प्राप्त गरिहाल्नेछन् ।" (तिर्मिजी, अलबानीले अस्सहीहामा वर्णन गर्नुभयो ३/१४) (तिर्मिजी अस्सहीहा अल्बानी)

## सूरतुल फ़त्ह-४८

سُوْرَةُ الْفَتْحِ

सूर: फ़त्ह* मदनी सूर: हो। यसमा उनन्तीस आयत तथा चार रूकूअ छन्।

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं कृपालु छ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

(१) नि:सन्देह (हे नबी !) हामीले तपाईंलाई एक खुल्ला विजय प्रदान गरेका छौं।

إِنَّا فَتَحْنَا لَكَ فَتْحًا مُّبِينًا ①

(२) ताकि जे-जति तिम्रा पाप पूर्वमा भए तथा

لِّيَغْفِرَ لَكَ اللَّهُ مَا تَقَدَّمَ

*६ हिज्रीमा रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम तथा लगभग एक हजार चार सय सहाबा उमराका लागि मक्का गए। किन्तु मक्काका निकट हुदैबियाका स्थानमा काफ़िरहरुले उहाँलाई रोकिदिए। तथा उमरा गर्न दिएनन्। उहाँले आदरणीय उस्मान रज़ीयल्लाहु अन्हुलाई आफ्नो प्रतिनिधि बनाएर मक्का पठाउनुभयो ताकि उनी कुरैशका प्रमुखहरुसित कुरा गरेर उनीहरुलाई मुसलमानहरुलाई उमरा गर्नुको आज्ञा दिनुमा तयार गरून्। किन्तु आदरणीय उस्मान रज़ीयल्लाहु अन्हु मक्का जानुका पश्चात उनको शहादत (हत्या) को अफ़वाह फैलिहाल्यो, जसपश्चात उहाँ सल्लल्लाहु अलैहि व सल्लमले सहाबासित आदरणीय उस्मान रज़ीयल्लाहु अन्हुको प्रतिशोध लिनका लागि "बैअत" प्रतिज्ञा गराउनुभयो। जो 'बैअते रिज़वान' कहलाउँछ। यो अफवाह गलत सिद्ध भयो, तैपनि काफ़िरहरुले अनुमति दिएनन् तथा मुसलमानहरुले आगामी वर्षका वचनमा फिर्ता हुने इरादा गरिहाले। त्यहीं टाउकोको मुण्डन पनि गरे तथा बलि पनि गरिहाले। त्यसका अतिरिक्त काफ़िरहरुले केही अन्य कुराहरुमा सम्झौता भयो जसलाई सहाबाको बहुमतले मन पराउँदैनथ्यो। किन्तु नबीको दृष्टिले यसका दूरगामी प्रभावका अनुमान लगाउँदै काफ़िरहरुका शर्तहरुमा नै सम्झौतालाई उत्तम ठान्नुभयो। हुदैबियाबाट मदीनातर्फ फर्कंदा मार्गमा यो सूर: अवतरित भयो, जसमा सन्धिलाई खुला रुपमा विजय भनियो, किनकि यो सन्धि मक्काको विजयको आधार सिद्ध भयो तथा यसका दुई वर्ष पश्चात नै मुसलमानहरुले मक्कामा विजेताका रुपमा प्रवेश गरे। यसैकारण केही सहाबाले भन्दथे कि तिमी मक्काको विजयलाई विजय मान्दछौ तथा हामी हुदैबियाका सम्झौतालाई विजय गन्दछौं। तथा नबी सल्लल्लाहु अलैहि व सल्लमले यस सूर:का सम्बन्धमा भन्नुभयो कि आजको राति ममाथि त्यो सूर: अवतरित भएको छ, जुन मलाई संसार तथा त्यसको प्रत्येक वस्तुभन्दा अधिक प्रिय छ। (सहीह बुख़ारी, किताबुल मगाज़ी, बाबु गज़्वतिल हुदैबिया व तफ़सीर सूरतिल फ़त्ह)

مِنْ ذَنْۢبِكَ وَمَا تَاَخَّرَ وَيُتِمَّ نِعْمَتَهٗ عَلَيْكَ وَيَهْدِيَكَ صِرَاطًا مُّسْتَقِيْمًا ۙ﴿٢﴾

जो पछाडी भए सबैलाई अल्लाह (तआ़ला) क्षमा गरिदेओस्[1] तथा तिमीमाथि आफ्ना उपकार पूर्ण गरिदेओस्[2] तथा तिमीलाई सोझो मार्गमा हिंडाओस् ।[3]

وَّيَنْصُرَكَ اللّٰهُ نَصْرًا عَزِيْزًا ﴿٣﴾

(३) तथा तपाईंलाई एउटा शक्तिशाली सहायता प्रदान गरोस् ।

هُوَ الَّذِيْٓ اَنْزَلَ السَّكِيْنَةَ فِيْ قُلُوْبِ الْمُؤْمِنِيْنَ لِيَزْدَادُوْٓا اِيْمَانًا مَّعَ اِيْمَانِهِمْ ؕ وَلِلّٰهِ جُنُوْدُ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَكَانَ اللّٰهُ

(४) त्यही हो जसले मुसलमानहरुका हृदयमा शान्ति (एवं आत्माविश्वास) हालिदियो, ताकि उनी आफ्ना ईमानका साथ-साथै अरु पनि ईमानमा बढिहालून् ।[4] तथा आकाशहरु तथा धर्तीका (समस्त) सेनाहरु अल्लाहकै हुन्,[5] तथा

यसबाट तात्पर्य प्रथम त्यागका विषय अथवा त्यो विषय हो जो उहाँले आफ्नो समझ तथा अनुभवले गर्नुभयो किन्तु अल्लाहले उनलाई मन पराएन, जस्तै अब्दुल्लाह बिन उम्मे मक्तूमको घटना छ, जसपश्चात सूर: 'अबस' उत्र्यो । यो विषय तथा कुरा यद्यपि गुनाह (पाप) तथा निर्दोषताका विपरीत छैनन् तथा उहाँको मर्यादा (महानता) देख्दै उनलाई पनि आलस्य मानियो जसमा क्षमाको घोषणा गरिदैछ । لِيَغْفِرَ मा लाम कारणवाची हो, अर्थात् यो खुल्ला विजय ती तीन कुराको कारण हो जो आयतमा वर्णित छ । तथा त्यो पापहरुको क्षमाको कारण यसकारण हो कि यस सन्धिका पश्चात इस्लाम धर्म स्वीकार गर्नेहरुको संख्या निकै बढ्यो, जसबाट उहाँका ठूलो पुण्यमा पनि अधिकता भयो तथा पुण्यकर्म, कुकर्महरुका लागि प्रायश्चित हुन् ।

[2]त्यस धर्मलाई प्रभुत्व दिएर जसको आमन्त्रण तिमी दिन्छौ अथवा विजय तथा प्रभुत्व प्रदान गरेर तथा केही भन्दछन् कि क्षमा तथा संमार्गमा दृढता यही उपहारको पूर्ति हो ।

[3]अर्थात् त्यसमाथि दृढता सुलभ गराओस् । मार्गदर्शनलाई उत्तम श्रेणीले सम्मानित गरोस् ।

[4]अर्थात् त्यस व्यग्रताका पश्चात जो मुसलमानहरुलाई हुदैबीयाका शर्तहरुको कारण भयो, अल्लाहले उनका हृदयलाई शान्ति प्रदान गऱ्यो जसले उनका हृदयलाई अधिक सन्तोष तथा ईमान प्राप्त भयो । यो आयत पनि प्रमाण हो कि ईमानमा कमी तथा अधिकता हुन्छ ।

[5]अर्थात् यदि अल्लाह तआ़ला चाहन्छ भने आफ्नो कुनै सेना (जस्तै फरिश्ताहरु) बाट काफ़िरहरुको विनाश गराइदेओस्, किन्तु उसले आफ्ना हिक्मतका कारण यस्तो गरेन तथा त्यसको ठाउँमा मोमिनहरुलाई युद्ध तथा जिहादको आदेश दियो । यसकारण अगाडी आफ्नो गुण सर्वज्ञ عليم तत्वदर्शी حكيم भनेको छ । अथवा अभिप्राय यो हो कि आकाश तथा धर्तीका फरिश्ता तथा यसैप्रकार अन्य शक्तिशाली सेना सबै अल्लाहका अधीन छन् तथा उनीबाट जस्तो चाहन्छ काम लिन्छ ।

عَلِيْمًا حَكِيْمًا ④

अल्लाह (तआ़ला) सर्वज्ञ हिक़्मतवाला छ।

لِيُدْخِلَ الْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا وَ يُكَفِّرَ عَنْهُمْ سَيِّاٰتِهِمْ ؕ وَكَانَ ذٰلِكَ عِنْدَ اللّٰهِ فَوْزًا عَظِيْمًا ⑤

(५) ताकि मुसलमान पुरुषहरु तथा महिलाहरुलाई ती स्वर्गहरुमा लगोस्, जसका[1] तल जलस्रोत प्रवाहित छन्, जहाँ उनी सधैं रहनेछन् तथा उनीबाट उनका पापलाई मेटाइदेओस्। तथा अल्लाहका निकट यो बहुत ठूलो सफलता हो।

وَّيُعَذِّبَ الْمُنٰفِقِيْنَ وَ الْمُنٰفِقٰتِ وَالْمُشْرِكِيْنَ وَالْمُشْرِكٰتِ الظَّآنِّيْنَ بِاللّٰهِ ظَنَّ السَّوْءِ ؕ عَلَيْهِمْ دَآئِرَةُ السَّوْءِ ۚ وَ غَضِبَ اللّٰهُ عَلَيْهِمْ وَلَعَنَهُمْ وَاَعَدَّ لَهُمْ جَهَنَّمَ ؕ وَ سَآءَتْ مَصِيْرًا ⑥

(६) तथा ताकि ती मुनाफ़िक़ पुरुषहरु एवं मुनाफ़िक महिलाहरु तथा मूर्तिपूजक पुरुषहरु एवं मूर्तिपूजक महिलाहरुलाई यातना देओस् जो अल्लाह (तआ़ला) का सम्बन्धमा कुविचार राख्नेहरु हुन्।[2] (वास्तवमा) उनीमाथि नराम्रो कुराको चक्र छ।[3] अल्लाह उनीमाथि क्रोधित भयो तथा उनलाई धिक्कार्यो र उनका लागि नरक तयार गर्‍यो, तथा त्यो फर्किनुको (अत्यन्त) नराम्रो स्थान हो।

وَلِلّٰهِ جُنُوْدُ السَّمٰوٰتِ وَ الْاَرْضِ ؕ وَكَانَ اللّٰهُ عَزِيْزًا حَكِيْمًا ⑦

(७) तथा अल्लाहकै लागि आकाशहरु तथा धर्तीका सेनाहरु हुन् तथा अल्लाह शक्तिशाली

कैयन् पटक त्यो एक काफ़िर समूहलाई दोस्रो काफ़िर समूहमाथि प्रभुत्व दिएर मुसलमानहरुको सहायताको मार्ग पैदा गर्दछ। आशय यो वर्णन गर्नु हो कि हे मुसलमानहरु! अल्लाहलाई तिम्रो जरुरत छैन, त्यो आफ्ना पैग़म्बर तथा धर्मको सहायताको काम कुनै पनि गिरोह तथा सेनाबाट लिनसक्छ। (इब्ने कसीर तथा ऐसरुत्तफासीर)

[1]हदीसमा वर्णित छ कि जब मुसलमानहरुले सूर: फ़तहको आरम्भिक भाग सुन لِيَغْفِرَلَكَ اللهُ त उनले रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमसँग भने तपाईंलाई बधाई छ, हामा लागि के छ ? जसपश्चात अल्लाहले आयत لِيُدْخِلَ الْمُؤْمِنِيْنَ अवतरित गरिदियो। (सहीह बुख़ारी, बाबु गज्वतिल हुदैबीयह) केही ज्ञाताहरु भन्दछन् कि यो لِيَزْدَادُوا अथवा يَنْصُرَكَ सित सम्बन्धित छ।

[2]अर्थात् अल्लाहका आदेशहरुमाथि आरोप लगाउँछन् तथा सहाबाका सम्बन्धमा भ्रम राख्दछन् कि यिनी पराजित अथवा हत भइहाल्नेछन् तथा इस्लाम धर्म समाप्त भइहाल्नेछ। (इब्ने कसीर)

[3]यो जुन चक्र, यातना एवं विनाशको मुसलमानहरुका लागि प्रतिक्षा गरिराखेका छन्, त्यो त उनैको भाग्य बन्न लागेको छ।

एवं हिम्मतवाला छ ।[1]

إِنَّآ أَرْسَلْنَٰكَ شَٰهِدًا وَمُبَشِّرًا وَنَذِيرًا ﴿٨﴾

(८) नि:सन्देह हामीले तिमीलाई साक्षी दिनेवाला तथा शुभ-सूचना सुनाउने एवं सचेत गर्नेवाला पठाएका छौं ।

لِّتُؤْمِنُوا بِاللَّهِ وَرَسُولِهِۦ وَتُعَزِّرُوهُ وَتُوَقِّرُوهُ وَتُسَبِّحُوهُ بُكْرَةً وَأَصِيلًا ﴿٩﴾

(९) ताकि (हे मुसलमानहरु !) तिमी अल्लाह तथा त्यसका रसूलमाथि ईमान स्वीकार गर तथा त्यसको सहायता गर र त्यसको आदर गर, तथा अल्लाहको पवित्रताको बिहान, साँझ वर्णन गर ।

إِنَّ الَّذِينَ يُبَايِعُونَكَ إِنَّمَا يُبَايِعُونَ اللَّهَ يَدُ اللَّهِ فَوْقَ أَيْدِيهِمْ فَمَن نَّكَثَ فَإِنَّمَا يَنكُثُ عَلَىٰ نَفْسِهِۦ وَمَنْ أَوْفَىٰ بِمَا عَٰهَدَ عَلَيْهُ اللَّهَ فَسَيُؤْتِيهِ أَجْرًا عَظِيمًا ﴿١٠﴾

(१०) जुन मानिस तिमीसित बैअत (अल्लाह एवं त्यसका रसूलको आज्ञा तथा अनुसरणको वचन बद्धता प्रकट गर्नु) गर्दछन् उनी नि:सन्देह अल्लाहबाटै बैअत गर्दछन् ।[2] उनका हातहरुमाथि अल्लाहको हात छ,[3] त जो व्यक्ति वचन तोड्दछ,[4] तथा जुन व्यक्ति त्यस वचनलाई

[1]यहाँ त्यसलाई मुनाफिक् तथा काफ़िरहरुको सन्दर्भमा पुन: वर्णन गरिएको छ कि अल्लाह तआला आफ्ना यी विरोधीहरुलाई हरप्रकारले विध्वस्त गर्न समर्थ छ । यो अर्कै कुरो हो कि त्यो आफ्नो हिक्मतका अधीन उनलाई जति चाहन्छ अवसर देओस् ।

[2]यो बैअत वास्तवमा अल्लाहकै हो, किनकि उसैले जिहाद (धर्मयुद्ध) को आदेश दिएको छ । जस्तो अर्को स्थानमा भन्यो कि यी आफ्ना प्राण तथा मालहरुको स्वर्गका साटो अल्लाहसित सौदा हो । (अत्तौबा-१११) यो यसैप्रकार छ, जस्तो ﴿مَّن يُطِعِ الرَّسُولَ فَقَدْ أَطَاعَ اللَّهَ﴾ (अन-निसा-८०)

[3]आयतबाट त्यही 'बैअते रिज्वान' अभिप्राय हो जो नबी सल्लल्लाहु अलैहि व सल्लमले आदरणीय उस्मानको शहादत (हत्या) को सूचना सुनेर उनको प्रतिशोध लिनका लागि हुदैबीयामा उपस्थित १४ वा १५ सय मुसलमानहरुसित लिनुभएको थियो ।

[4]نَكَثَ (वचन भङ्ग गर्नु) बाट तात्पर्य यहाँ बैअत तोड्दिनु अर्थात् प्रतिज्ञा अनुसार, युद्धमा भाग नलिनु हो । अर्थात् जुन व्यक्तिले यस्तो गर्नेछ त त्यसको प्रतिक्रिया उसैमाथि पर्नेछ ।

पूरा गर्दछ जुन उसले अल्लाहका साथ गरेको छ[1] त त्यसलाई शीघ्र अल्लाहले बहुत ठूलो प्रतिफल (पुण्य) दिनेछ ।

سَيَقُولُ لَكَ الْمُخَلَّفُونَ مِنَ الْأَعْرَابِ شَغَلَتْنَا أَمْوَالُنَا وَأَهْلُونَا فَاسْتَغْفِرْ لَنَا ۚ يَقُولُونَ بِأَلْسِنَتِهِم مَّا لَيْسَ فِي قُلُوبِهِمْ ۚ قُلْ فَمَن يَمْلِكُ لَكُم مِّنَ اللَّهِ شَيْئًا إِنْ أَرَادَ بِكُمْ ضَرًّا أَوْ أَرَادَ بِكُمْ نَفْعًا ۚ بَلْ كَانَ اللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرًا ﴿١١﴾

(११) गाउँलेहरुमध्ये जो पछाडी छाडिएका थिए उनीहरुले अब तिमीसित भन्नेछन् कि हामी आफ्ना धन तथा सन्तानमा लागिरहयौं । तसर्थ तपाईं हाम्रा लागि क्षमाको प्रार्थना गर्नुस्,[2] यिनीहरु आफ्ना मुखले त्यो भन्दछन् जो उनका हृदयमा छैन ।[3] तपाईं उत्तर दिनुस् कि तिम्रा लागि अल्लाहको तर्फबाट कुनै कुराको पनि अधिकार कसले राख्दछ यदि त्यसले तिमीलाई हानि पुऱ्याउन चाहन्छ,[4] अथवा तिमीलाई कुनै लाभ

[1]कि त्यसले अल्लाहका रसूल सल्लल्लाहु अलैहि व सल्लमको सहायता गर्नेछ, उनका साथ भई युद्ध गर्नेछ यहाँसम्मकि अल्लाह मुसलमानहरुलाई विजय तथा प्रभुत्व प्रदान गरोस् ।

[2]यसबाट मदीनाका आसपास आबाद जातिहरु गिफ़ार, मुजैनह, जुहैनह, अस्लम तथा अन्य जातिहरु अभिप्राय छन् । जब नबी सल्लल्लाहु अलैहि व सल्लमले स्वप्न देख्नुका पश्चात (जसको विवरण पछि आउनेछ) उमराका लागि मक्का जानुको सार्वजनिक घोषणा गराइदिनु हो । उक्त जातिहरुले सोचे कि वर्तमान स्थिति त मक्का जानका लागि अनुकूल छैन । त्यहाँ अहिले काफ़िरहरुको प्रभुत्व छ तथा मुसलमान निर्बल छन्, तथा मुसलमान उमराका लागि शस्त्र धारण गरी जान सक्दैनन् । यदि यस्तोमा काफ़िरहरुले मुसलमानहरुसित युद्ध गर्नुको निर्णय लिए त निहत्था मुसलमान उनको मुक़ाबिला कसरी गर्नेछ ? यस समय मक्का जानुको अर्थ स्वयंको विनाश गर्नु हो । यसकारण यिनीहरु तपाईंका साथ उमराका लागि गएनन् । अल्लाह तआला उनका विषयमा भन्दछ कि यिनी तिमीसित कामहरुको बहाना गर्नेछन् तथा क्षमायाचनाका लागि प्रार्थनाहरु गर्नेछन् ।

[3]अर्थात् मुखहरुमा त यो छ कि हाम्रा पछाडी हाम्रा घरहरु तथा बाल-बच्चाहरुको संरक्षक कोही थिएन । अत: हामी स्वयं नै रुक्नुपऱ्यो, किन्तु वास्तवमा उनी पछि रहनु निफ़ाक़ (अवसरवाद) तथा मृत्युका भयका कारण थियो ।

[4]यदि अल्लाह तिम्रा माल ध्वस्त गर्नु तथा तिम्रा परिवारलाई विनाश गर्नुको निर्णय गर्छ त के तिमीमध्ये कोही यस्तो छ जसले त्यसलाई यस्तो गर्न नदेओस् ।

पुऱ्याउन चाहन्छ ।[1] बरु तिमी जे-जति गरिराखेका छौ, त्यससित अल्लाह (तआ़ला) राम्ररी परिचित छ ।[2]

بَلْ ظَنَنْتُمْ اَنْ لَّنْ يَّنْقَلِبَ الرَّسُوْلُ وَالْمُؤْمِنُوْنَ اِلٰٓى اَهْلِيْهِمْ اَبَدًا وَّزُيِّنَ ذٰلِكَ فِيْ قُلُوْبِكُمْ وَظَنَنْتُمْ ظَنَّ السَّوْءِ ۖ وَكُنْتُمْ قَوْمًا بُوْرًا ⑫

(१२) (होइन) बरु तिमीले त यो भन्ठानेका थियौ कि पैग़म्बर एवं मुसलमानहरुको आफ्ना घरहरुतिर फर्किआउने कुरा पूर्णतः असम्भव छ तथा यही विचार तिम्रा हृदयमा बसिसकेको थियो; तिमीले कुविचार गरेका थियौ ।[3] (वास्तवमा) तिमीहरु छौ पनि नष्ट हुनेवाला ।[4]

وَمَنْ لَّمْ يُؤْمِنْ بِاللّٰهِ وَرَسُوْلِهٖ فَاِنَّآ اَعْتَدْنَا لِلْكٰفِرِيْنَ سَعِيْرًا ⑬

(१३) तथा जो व्यक्ति अल्लाहमाथि तथा त्यसका रसूलमाथि ईमान स्वीकार गर्दैन त हामीले पनि यस्ता काफ़िरहरुका लागि प्रज्वलित अग्नि तयार गरेका छौं ।

وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۭ يَغْفِرُ لِمَنْ يَّشَاۗءُ وَيُعَذِّبُ مَنْ يَّشَاۗءُ ۭ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ⑭

(१४) तथा आकाशहरु तथा धर्तीको राज्य अल्लाहकै लागि छ, जसलाई चाहन्छ क्षमा गरिदेओस् तथा जसलाई चाहन्छ यातना देओस्, तथा अल्लाह तआ़ला अत्यन्त क्षमाशील कृपालु छ ।[5]

अर्थात् तिमीलाई सहायता पुऱ्याउन तथा ग़नीमत प्रदान गर्न चाहन्छ भने कसले रोक्न सक्दछ ?

[2]यो वास्तवमा उपरोक्त पछि रहिजानेहरुको खण्डन हो, जसले यो अनुमान गरिहालेका थिए कि यदि उनी नबी सल्लल्लाहु अलैहि व सल्लमका साथ गएनन् भने हानिबाट सुरक्षित तथा लाभबाट लाभान्वित हुनेछन्, जबकि लाभ तथा हानिको सर्वाधिकार अल्लाहकै हातमा छ ।

[2]अर्थात् तिमीलाई तिम्रो कर्महरुको पूरा फल दिनेछ ।

[3]तथा त्यो यही थियो कि अल्लाहले आफ्ना रसूल सल्लल्लाहु अलैहि व सल्लमको सहायता गर्नेछैन । यो त्यही प्रथम अनुमान हो, यहाँ जोड दिनका लागि दोहोऱ्याइएको छ ।

[4]بُوْرٌ – بَائِرٌ को बहुवचन हो, नाशवान, अर्थात् यी मानिसहरु हुन् जसको भाग्य विनाश हो यदि यिनी अल्लाहको प्रकोपबाट बचिहाले त परलोकमा बचेर जान सक्दैनन्, त्यहाँ त दण्ड अवश्य भोग्नुछ ।

[5]यसमा पिछड्नेवालाहरुका लागि क्षमा माँग्नु तथा अल्लाहको तर्फबाट ध्यान गर्नुको

سَيَقُولُ الْمُخَلَّفُونَ إِذَا انطَلَقْتُمْ إِلَىٰ مَغَانِمَ لِتَأْخُذُوهَا ذَرُونَا نَتَّبِعْكُمْ ۖ يُرِيدُونَ أَن يُبَدِّلُوا كَلَامَ اللَّهِ ۚ قُل لَّن تَتَّبِعُونَا كَذَٰلِكُمْ قَالَ اللَّهُ مِن قَبْلُ ۖ فَسَيَقُولُونَ بَلْ تَحْسُدُونَنَا ۚ بَلْ كَانُوا لَا يَفْقَهُونَ إِلَّا قَلِيلًا ⑮

(१५) जब तिमी (युद्धमा प्राप्त) परिहार लिन जान थाल्नेछौ त तुरुन्त यी पछि छाडिएका मानिसहरुले भन्नेछन् कि हामीलाई पनि आफ्ना साथ हिंड्नुको आज्ञा दिनुस्[1] उनीहरु चाहन्छन् कि अल्लाह (तआ़ला) का कथनलाई बदलिदिनु ।[2] (तपाईं) भनिदिनुस् कि अल्लाह (तआ़ला) पूर्वमा नै भनिसकेको छ कि तिमी कदापि हाम्रो अनुगमन गर्ने छैनौ ।[3] त उनीहरुले त्यसको उत्तर दिनेछन् (होइन-होइन) बरु तिमी हामीसित द्वेष राख्दछौ ।[4] (वास्तविक कुरो यो हो) कि उनीहरु निकै नै कम बुझ्दछन् ।[5]

प्रलोभन हो कि यदि उनीहरु द्वयवादबाट तौबा गर्दछन् त अल्लाह तआ़लाले उनीहरुलाई क्षमा गरिदिनेछ । त्यो अति क्षमावान दयानिधि छ ।

[1]यसमा ख़ैबरका युद्धको चर्चा छ, जसको विजयको शुभ-सूचना अल्लाहले हुदैबियहमा दिएको थियो, तथा अल्लाहले यो पनि भनेको थियो कि यहाँबाट जति पनि धन प्राप्त हुनेछ, केवल हुदैबियहमा सम्मिलित मानिसहरुको भाग हो । जस्तो कि हुदैबियहबाट फर्कनुका पश्चात जब उहाँले यहूदीहरुका निरन्तर वचन भङ्ग गर्नुका कारण ख़ैबरमा आक्रमणको योजना बनाउनु भयो त उपरोक्त पछि परेकाले पनि मात्र युद्ध धन प्राप्त गर्नाका लागि साथ जानुको विचार प्रकट गरे, जसलाई स्वीकार गरिएन । आयतमा मग़ानिमसित अभिप्राय ख़ैबरमा प्राप्त मालसितै छ ।

[2]अल्लाहका वचनबाट अभिप्राय अल्लाहका ख़ैबरबाट प्राप्त माल (ग़नीमत) लाई हुदैबियहवालाहरुका लागि विशेष गर्नुको वचन हो । मुनाफ़िक़ीन (अवसरवादी) यसमा भाग लिएर अल्लाहका वचनलाई बदल्न चाहन्थे ।

[3]यो नकार निषेधाज्ञाका अर्थमा छ, अर्थात् तिमीलाई हाम्रो साथमा हिंड्नुको अनुमति छैन । अल्लाहको आदेश पनि यही हो ।

[4]अर्थात् यी पिछडिएका मानिसहरुले भन्दछन् कि तिमी ईर्ष्याका कारणले हामीलाई साथ लैजानबाट भागिराखेका छौ ताकि ग़नीमतका मालमा हामी तिम्रा साझेदार नहोऔं ।

[5]अर्थात् कुरो यो होइन जो तिनीहरु बुझिराखेका छन्, बरु यो प्रतिबन्ध उनीबाट पछि रहनका दण्ड स्वरुप छ । किन्तु वास्तविक कुरो उनको समझमा आइराखेको छैन ।

قُل لِّلْمُخَلَّفِينَ مِنَ الْأَعْرَابِ سَتُدْعَوْنَ إِلَىٰ قَوْمٍ أُولِي بَأْسٍ شَدِيدٍ تُقَاتِلُونَهُمْ أَوْ يُسْلِمُونَ ۖ فَإِن تُطِيعُوا يُؤْتِكُمُ اللَّهُ أَجْرًا حَسَنًا ۖ وَإِن تَتَوَلَّوْا كَمَا تَوَلَّيْتُم مِّن قَبْلُ يُعَذِّبْكُمْ عَذَابًا أَلِيمًا ﴿١٦﴾

(१६) (तपाईं) पछि छाडिएका देहातीहरुसित भनिदिनुस् कि शीघ्र नै तिमी एउटा अत्यन्त योद्धा समुदायतिर बोलाइनेछौ कि तिमीले उनीसित युद्ध गर्नेछौ अथवा उनीहरु मुसलमान भइहाल्नेछन् ।[1] त यदि तिमीले आज्ञापालन गर्नेछौ[2] त अल्लाह (तआला) ले तिमीलाई अति उत्तम प्रतिफल दिनेछ,[3] तथा यदि तिमीले मुख फर्काइहाल्यौ जस्तो कि तिमीले यसभन्दा पूर्व मुख फर्काइसकेका छौ, त त्यसले तिमीलाई कष्टदायी यातना दिनेछ ।[4]

لَّيْسَ عَلَى الْأَعْمَىٰ حَرَجٌ وَلَا عَلَى الْأَعْرَجِ حَرَجٌ وَلَا عَلَى الْمَرِيضِ حَرَجٌ ۗ وَمَن يُطِعِ اللَّهَ وَرَسُولَهُ يُدْخِلْهُ جَنَّاتٍ تَجْرِي

(१७) अन्धाका लागि कुनै पाप छैन, न लङ्गडाका लागि कुनै पाप छ तथा न रोगीका लागि कुनै पाप छ ।[5] र जसले अल्लाह तथा त्यसका रसूलको आज्ञापालन गर्दछ, त्यसलाई अल्लाह यस्ता स्वर्गमा प्रवेश दिनेछ जसका (वृक्षहरुका) तलबाट सरिताहरु

[1]यस योद्धा समुदायका निश्चिततामा मतभेद छ । केही व्याख्याकारहरुले यसबाट अरबकै केही जातिहरु तात्पर्य लिएका छन्, जस्तै हवाजिन अथवा सकीफ़, जससित हुनैनका स्थानमा मुसलमानहरुसित युद्ध भयो अथवा मुसैलमा कज्ज़ाबको जाति बनू हनीफ़ा । केही विद्वानहरुले फारस तथा रोमका अग्निपूजक एवं इसाई तात्पर्य लिएका छन् । ती पछि रहने देहातिहरुसित भनिंदैछ कि शीघ्र नै एक लडाकू जातिसित युद्ध गर्नका लागि तिमीलाई बोलाइनेछ । यदि उनीहरु मुसलमान भएनन् भने उनका तथा तिम्रा बीच युद्ध हुनेछ ।

[2]अर्थात् शुद्ध मनले मुसलमानहरुका साथ मिलेर लड्नेछन् ।

[3]संसारमा ग़नीमत (परिहार) तथा आख़िरतमा पापीहरुको क्षमा एवं स्वर्ग ।

[4]अर्थात् जुनप्रकार हुदैबियहका अवसरमा मुसलमानहरुका साथ मक्का जानबाट भागेका थिए, त्यसैप्रकार अहिले पनि तिमी ज़िहादबाट भाग्छौ भने अल्लाहको दुखद यातना तिम्रो लागि तयार छ ।

[5]अन्धोपना तथा लङ्गडोपनाका कारण हिंड्डुल गर्न नसक्नु, यो दुबै त अवश्य विवशता हो । यस्ता विवश अथवा उनका समान अन्य लाचारहरुलाई ज़िहादबाट अलग गरिदियो । حرج (हरज) को अर्थ दोष हो । यिनका अतिरिक्त जो रोग छन् ती सामयिक व्यवस्था हुन् । जबसम्म उनी वास्तवमा रोगी छन् ज़िहादमा भाग लिनबाट अलग छन् । रोग समाप्त हुनासाथ उनीहरुले ज़िहादमा अरु मुसलमानहरुका साथ भाग लिनेछन् ।

مِن تَحۡتِهَا ٱلۡأَنۡهَٰرُۖ وَمَن يَتَوَلَّ يُعَذِّبۡهُ عَذَابًا أَلِيمًا ١٧

प्रवाहित छन्, जसले मुख फर्काउँछ, त्यसलाई कष्टदायी यातनाहरु दिनेछ ।

لَّقَدۡ رَضِيَ ٱللَّهُ عَنِ ٱلۡمُؤۡمِنِينَ إِذۡ يُبَايِعُونَكَ تَحۡتَ ٱلشَّجَرَةِ فَعَلِمَ مَا فِي قُلُوبِهِمۡ فَأَنزَلَ ٱلسَّكِينَةَ عَلَيۡهِمۡ وَأَثَٰبَهُمۡ فَتۡحًا قَرِيبًا ١٨

(१८) नि:सन्देह अल्लाह (तआला) ईमान भएकाहरुसित प्रसन्न भइहाल्यो जब उनीहरुले वृक्षमुनि तिमीसित बैअत (प्रतिज्ञा) गरिराखेका थिए ।[१] उनका हृदयहरुमा जे-जति थियो त्यसलाई त्यसले ज्ञात गरिहाल्यो ।[२] तथा उनीमाथि शान्ति अवतरित गऱ्यो[३] तथा उनलाई निकटको विजय प्रदान गऱ्यो ।[४]

وَمَغَانِمَ كَثِيرَةً يَأۡخُذُونَهَاۗ وَكَانَ ٱللَّهُ عَزِيزًا حَكِيمًا ١٩

(१९) तथा धेरै परिहार जसलाई उनीहरुले प्राप्त गर्नेछन्,[५] तथा अल्लाह प्रभावशाली हिक्मतवाला (तत्वदर्शी) छ ।

وَعَدَكُمُ ٱللَّهُ مَغَانِمَ كَثِيرَةً

(२०) अल्लाह तआलाले तिमीसित निकै धेरै

[१]यो ती वैअते रिज़्वानमा सम्मिलित सहाबाका लागि अल्लाहको प्रसन्नता तथा उनका पक्का-सच्चा मोमिन हुनुको प्रमाण हो, जसले हुदैबियहमा एउटा रुखमुनि यस कुरामा बैअत (प्रतिज्ञा) गरे कि उनी मक्काका कुरैशसित लड्नेछन् तथा भाग्ने छैनन ।

[२]अर्थात् उनका हृदयमा जो सच्चाई तथा सफाईमा भावनाहरु थिए, अल्लाह उनीसित पनि परिचित छ । यसबाट सहाबाका ती शत्रुहरुको खण्डन भइहाल्यो जो भन्दछन् कि उनको ईमान उपरी थियो, उनी हृदयबाट मुनाफ़िक (अवसरवादी) थिए ।

[३]अर्थात् उनीहरु निहत्था थिए, युद्धका विचारले गएका थिएनन् । यसकारण अस्त्र-शस्त्र उचित मात्रामा थिएनन् । तैपनि नबी सल्लल्लाहु अलैहि व सल्लमले आदरणीय उस्मानको प्रतिशोध लिनका लागि उनीबाट ज़िहादको बैअत (वचन) लिए त बिना सोचिकन सबै लड्नलाई तयार भइहाले । अर्थात् हामीले मृत्युको भय उनका हृदयहरुबाट निकालिदियौं तथा त्यसका स्थानमा शान्ति तथा धैर्य उनीमाथि उतारिदियौं, जसका कारण उनलाई लड्नुको उत्साह भयो ।

[४]यसबाट अभिप्राय त्यही ख़ैबरको विजय हो, जो यहूदीहरुको गढ थियो तथा हुदैबीयहबाट वापसीमा मुसलानहरुले त्यसलाई विजय गरे ।

[५]यो ती ग़नीमतहरु (परिहार) हुन् जो ख़ैबरमा प्राप्त भयो । यो अति उब्जाउ तराईको क्षेत्र थियो । यसै हिसाबले यहाँबाट मुसलमानहरुलाई अत्याधिक माल ग़नीमतमा प्राप्त भयो, जसलाई केवल हुदैबियहवालाहरुमा वितरण गरियो ।

تَأْخُذُونَهَا فَعَجَّلَ لَكُمْ هَٰذِهِۦ وَكَفَّ أَيْدِيَ ٱلنَّاسِ عَنكُمْ وَلِتَكُونَ ءَايَةً لِّلْمُؤْمِنِينَ وَيَهْدِيَكُمْ صِرَٰطًا مُّسْتَقِيمًا ﴿٢٠﴾

ग़नीमतहरु (परिहारहरु) को वाचा गरेको छ[1] जसलाई तिमीले प्राप्त गर्नेछौ, बस यो त तिमीलाई शीघ्र नै प्रदान गरिदियो ।[2] तथा मानिसहरुका हात तिमीबाट रोकिदियो[3] ताकि ईमान भएकाहरुका लागि यो एउटा निशानी हुनजाओस्[4] तथा ताकि त्यसले तिमीलाई सोझो मार्गमा हिंडाओस् ।[5]

وَأُخْرَىٰ لَمْ تَقْدِرُوا۟ عَلَيْهَا قَدْ أَحَاطَ ٱللَّهُ بِهَا ۚ وَكَانَ ٱللَّهُ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرًا ﴿٢١﴾

(२१) तथा तिमीलाई अन्य [(ग़निमतहरु) परिहार] पनि देओस् जसमाथि अहिलेसम्म तिमीले नियन्त्रण पाएनौं । अल्लाह (तआ़ला) ले उनलाई आफ्ना नियन्त्रणमा लिएको छ,[6] तथा अल्लाह (तआ़ला) प्रत्येक वस्तुमाथि समर्थ छ ।

[1]यो अन्य विजयहरुमा प्राप्त ग़नीमतहरुको शुभ-सूचना हो जो क़ियामत सम्मका लागि मुसलमानहरुलाई प्राप्त हुनेछ ।

[2]अर्थात् ख़ैबरको विजय र हुदैबीयह सम्झौता किनकि यो दुबै त शीघ्र रुपमा मुसलमानहरुलाई प्राप्त भइहाल्यो ।

[3]हुदैबीयहमा काफ़िरहरुका हात तथा ख़ैबरमा यहूदीहरुको हात अल्लाहले रोकिदियो, अर्थात् उनलाई निरुत्साह गरिदियो तथा उनी मुसलमानहरुसित लड्न सकेन ।

[4]अर्थात् मानिसहरु यस घटनाका वर्णनको अध्ययन गरेर यो अनुमान लगाइहाल्नेछन् कि अल्लाह तआ़ला कम संख्या हुँदाहुँदै पनि मुसलमानहरुको संरक्षक तथा उनीहरुलाई शत्रुहरुमाथि विजय प्रदान गर्नेवाला छ, अथवा यो रोकिनु सबै वचन दिइएका कुरामा रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमको सत्याताको लक्षण हो ।

[5]अर्थात् सन्मार्गमा दृढता प्रदान गरोस् अथवा यस प्रतीकबाट तिमीलाई मार्गदर्शनमा अझ अधिक गरोस् ।

[6]यो आगमी विजय तथा उनकाद्वारा प्राप्त हुने ग़नीमतहरुतिर संकेत छ । जुनप्रकार चार पर्खाल गरी कुनै वस्तुलाई आफ्ना नियन्त्रणमा गरिन्छ र पछि त्यसका विषयमा निश्चिन्तता हुनजान्छ, यसैप्रकार अल्लाह तआ़लाले यी विजयहरुलाई आफ्ना अधिकारका घेरामा लिइहालेको छ अर्थात् यद्यपि अहिले तिम्रो विजयको परिधि त्यहाँसम्म विस्तृत भएको छैन किन्तु अल्लाहले त्यसलाई तिम्रा लागि आफ्ना नियन्त्रणमा गरेको छ, त्यसले जब चाहनेछ, त्यसमाथि तिमीलाई प्रभुत्व प्रदान गर्नेछ, जसमा कुनै सन्देहको कुरा छैन, यसकारण कि त्यो प्रत्येक वस्तुमाथि समर्थ छ । केही विद्वानहरुले घेर्नुका अर्थ ज्ञान गरेका छन् अर्थात् उसलाई ज्ञात छ कि त्यो क्षेत्र पनि तिमीले विजय गर्नेछौ

وَلَوْ قٰتَلَكُمُ الَّذِيْنَ كَفَرُوْا لَوَلَّوُا الْاَدْبَارَ ثُمَّ لَا يَجِدُوْنَ وَلِيًّا وَّلَا نَصِيْرًا ﴿٢٢﴾

(२२) तथा यदि तिमीसित काफ़िरले युद्ध गर्दथे भने वस्तुतः उल्टै पिठ्यूँ देखाएर भाग्दथे, त्यसपछि न त कोही कार्यक्षम पाउँथे, न सहायता गर्नेवाला ।[1]

سُنَّةَ اللّٰهِ الَّتِيْ قَدْ خَلَتْ مِنْ قَبْلُ ۚ وَلَنْ تَجِدَ لِسُنَّةِ اللّٰهِ تَبْدِيْلًا ﴿٢٣﴾

(२३) अल्लाहका त्यस नियमका अनुसार जो पहिलाबाट चलिआएको छ,[2] र तिमी कहिल्यै पनि अल्लाहका नियमलाई परिवर्तित नभएको पाउनेछौ ।

وَهُوَ الَّذِيْ كَفَّ اَيْدِيَهُمْ عَنْكُمْ وَاَيْدِيَكُمْ عَنْهُمْ بِبَطْنِ مَكَّةَ مِنْۢ بَعْدِ اَنْ اَظْفَرَكُمْ عَلَيْهِمْ ۭ وَكَانَ اللّٰهُ بِمَا تَعْمَلُوْنَ بَصِيْرًا ﴿٢٤﴾

(२४) त्यही हो जसले खास मक्कामा काफ़िरहरुका हातलाई तिमीबाट तथा तिम्रा हातलाई उनीबाट रोकिहाल्यो यसका पश्चात कि उसले तिमीलाई उनीमाथि विजयी गरिदिएको थियो,[3] तथा तिमी जे-जति गरिराखेका थियौ अल्लाह (तआला) त्यसलाई देखिराखेको छ ।

[1]यो हुदैबीयहमा संभावित युद्धका विषयमा भनिंदैछ कि यदि यी मक्काका कुरैश सन्धि गर्दैनथे बरु लड्नुको मार्ग अपनाउँथे भने यिनी पिठ्यूँ फर्काएर भागिहाल्थे, कोही उनको सहायक हुने थिएन । अभिप्राय यो हो कि हामीले त्यहाँ तिम्रो सहायता गर्दथ्यौं तथा हाम्रा मुकाबिलामा कसलाई ठहर्नुको शक्ति छ ?

[2]अर्थात् यो अल्लाहको रीति पहिलादेखि चलिआइराखेको छ कि जब कुफ्र तथा ईमानका बीच निर्णायक युद्धको अवसर आउँछ त अल्लाह ईमानवालाहरुको सहायता गरेर सत्यलाई उच्च गर्दछ, जस्तै यस नीतिका अनुसार बद्रमा तिम्रो सहायता गरियो ।

[3]जब नबी सल्लल्लाहु अलैहि व सल्लम हुदैबीयहमा हुनुहुन्थ्यो त काफ़िरहरुले ८० सशस्त्र व्यक्तिहरुलाई यस विचारले पठाए कि उनलाई अवसर प्राप्त होस् त नबी सल्लल्लाहु अलैहि वसल्लम तथा उहाँका साथीहरुका विरुद्ध कारवाही गरून् । यो सशस्त्र दल तंईम नामक पर्वततिरबाट हुदबीयहमा आयो, जसको ज्ञान मुसलमानहरुलाई पनि भइहाल्यो तथा उनले सबैलाई समातिहाले र उहाँ सल्लल्लाहु अलैहि वसल्लमका सामु ल्याए । उनको अपराध त गम्भीर थियो तथा उनलाई जे-पनि दण्ड दिइँदा उचित हुन्थ्यो । परन्तु भय यो थियो कि त्यसपछि युद्ध अनिवार्य हुनजान्थ्यो, जबकि नबी सल्लल्लाहु अलैहि वसल्लम यस अवसरमा युद्ध होइन, सन्धि चाहनुहुन्थ्यो, किनकि यसैमा मुसलमानहरुको हित थियो । यसकारण वहाँले सबैलाई क्षमा गरी मुक्त गरिदिनु भयो । (सहीह मुस्लिम किताबुल जिहाद) खास मक्कासित अभिप्राय हुदैबीयह सन्धि हो, अर्थात् हामीले हुदैबीयहमा तिमीलाई काफ़िरहरुसित तथा काफ़िरहरुलाई तिमीसित लड्नुबाट रोक्यौं । यो अल्लाहले उपकार स्वरुप वर्णन गर्नुभएको छ ।

هُمُ الَّذِينَ كَفَرُوا وَصَدُّوكُمْ عَنِ الْمَسْجِدِ الْحَرَامِ وَالْهَدْيَ مَعْكُوفًا أَنْ يَبْلُغَ مَحِلَّهُ ۚ وَلَوْلَا رِجَالٌ مُؤْمِنُونَ وَنِسَاءٌ مُؤْمِنَاتٌ لَمْ تَعْلَمُوهُمْ أَنْ تَطَئُوهُمْ فَتُصِيبَكُمْ مِنْهُمْ مَعَرَّةٌ بِغَيْرِ عِلْمٍ ۖ لِيُدْخِلَ اللَّهُ فِي رَحْمَتِهِ مَنْ يَشَاءُ ۚ لَوْ تَزَيَّلُوا لَعَذَّبْنَا الَّذِينَ كَفَرُوا مِنْهُمْ عَذَابًا أَلِيمًا ﴿٢٥﴾

(२५) यही ती मानिसहरु हुन् जसले कुफ़्र गरे तथा तिमीलाई मस्जिदे हरामबाट रोके तथा बलिका लागि रोकिएका पशुहरुलाई त्यसका स्थानसम्म पुग्नबाट (रोके),[1] तथा यदि यस्ता (धेरै) मुसलमान पुरुष तथा (धेरै) मुसलमान महिलाहरु नभएको भए, जसको तिमीलाई सूचना थिएन[2] कि तिमीले उनलाई कुल्चिदिनेछौ जसमा उनका कारण तिमीलाई पनि अनभिज्ञतामा हानि पुग्दथ्यो[3] (त तिमीलाई लड्नुको आज्ञा दिइन्थ्यो[4] परन्तु यस्तो गरिएन)[5] ताकि अल्लाह (तआ़ला) आफ्नो कृपामा जसलाई चाहन्छ सम्मिलित गरोस् तथा यदि यी अलग-

---

[1] هَدْيٌ (हदी) त्यस पशुलाई भनिन्छ जसलाई हज़ अथवा उमरा गर्नेले आफूसँग मक्का लैजान्छ । مَحِل (महिल्ल) सित अभिप्राय बलिको स्थान हो जहाँ उनलाई लगी वध गरिन्छ । यो स्थान उमरा गर्नेहरुका लागि अज्ञानता कालमा 'मर्वह' पहाडीका निकट तथा हाजीहरुका लागि 'मिना' थियो । इस्लाममा बलिको स्थान मक्का, मिना र पूर्ण हरम छ । مَعْكُوفًا (माकूफ़न) स्थितिवाचक हो, अर्थात् यो पशु यस प्रतीक्षामा रोकिएका थिए कि मक्कामा प्रवेश गरून् ताकि उनलाई वध गरियोस् । तात्पर्य यो हो कि काफ़िरहरुले नै तिमीलाई मस्जिदे हरामबाट रोकेका थिए तथा जो पशु तिम्रा साथमा थिए उनलाई पनि बलि स्थलसम्म पुग्न दिएनन् ।

[2] अर्थात् मक्कामा आफ्नो ईमान लुकाएर रहिरहेका थिए ।

[3] काफ़िरहरुका साथ लडाईको दशामा सम्भव थियो कि यिनी पनि मारिन्थे तथा तिमीलाई नोक्सानी पुग्दथ्यो । مَعَرَّةٌ को मूल अर्थ दोष हो । यहाँ तात्पर्य प्रायश्चित तथा त्यो अनिष्ठ तथा लज्जा हो जो काफ़िरहरुका कारण तिमीले बेहोर्नुपर्थ्यो । अर्थात् एक त गल्तीले हत्याका दीयत (अर्थदण्ड) दिनुपर्थ्यो, दोस्रो काफ़िरहरुको यो व्यङ्ग्य सुन्नुपर्थ्यो कि यिनी आफ्ना मुसलमान साथीहरुलाई पनि मारिदिन्छन् ।

[4] यो لَوْلَا (लौला, यदि) को लुप्त उत्तर हो, अर्थात् यदि त्यो कुरो नभएको भए त तिमीलाई मक्कामा प्रवेश गर्न तथा कुरैशसित लड्नुको अनुमति दिइहालिन्थ्यो ।

[5] बरु मक्कावासीहरुलाई अवसर दिइयो ताकि जसलाई अल्लाह चाहन्छ इस्लामको सौभाग्य प्रदान गरिदेओस् ।

अलग हुन्थे भने उनीहरुमा जो काफ़िर थिए हामीले उनलाई कष्टदायी दण्ड दिन्थ्यौं ।[1]

إِذْ جَعَلَ الَّذِينَ كَفَرُوا فِي قُلُوبِهِمُ الْحَمِيَّةَ حَمِيَّةَ الْجَاهِلِيَّةِ فَأَنزَلَ اللَّهُ سَكِينَتَهُ عَلَىٰ رَسُولِهِ وَعَلَى الْمُؤْمِنِينَ

(२६) जबकि ती[2] काफ़िरहरुले आफ्ना हृदयमा पक्षपात (भावना) लाई स्थान दिए तथा पक्षपात पनि अज्ञानताको, त अल्लाह (तआ़ला) ले आफ्ना रसूलमाथि तथा ईमान भएकाहरुमाथि आफ्नो तर्फबाट शान्ति (सन्तोष) अवतरित गर्‍यो[3] तथा

[1] تَزَيَّلُوا यो تَمَيَّزُوا को अर्थमा छ । अभिप्राय यो हो कि मक्काका निवासी मुसलमान यदि काफ़िरहरुबाट अलग रहन्थे त हामीले तिमीलाई मक्कावासीहरुसित लड्नुको अनुमति दिइदिन्थ्यौं तथा तिम्रा हातबाट उनलाई वध गराउँथ्यौं तथा यसप्रकार उनलाई दुखदायी यातना दिन्थ्यौं । عذاب اليم सित तात्पर्य यहाँ हत्या, बन्दी बनाउनु तथा प्रकोप एवं प्रभुत्व हो ।

[2] إِذْ को सम्बन्ध لَعَذَّبْنَا सित छ अथवा وَاذْكُرُوا सित जो लुप्त छ । अर्थात त्यस समयलाई याद गर जब यी काफ़िरहरुले.........

[3] काफ़िरहरुको यस अज्ञानतापूर्ण भावना (अहंकार एवं पक्षपात) सित अभिप्राय मक्कावासीहरुद्वारा मुसलमानहरुलाई मक्कामा प्रवेशबाट रोक्नु हो । उनीहरुले भने कि यिनीहरुले हाम्रा पुत्र तथा पिताहरुको हत्या गरेका छन् । "लात तथा उज़्ज़ाको सौगन्ध कि उनलाई हामीले कहिल्यै प्रवेश गर्न दिने छैनौं," अर्थात् उनीहरुले यसलाई आफ्नो मर्यादा तथा सम्मानको समस्या बनाइहाले । यसैलाई अज्ञानताको पक्षपात भनियो, किनकि काबामा उपासनाका लागि आउनबाट रोक्नुको कसैलाई अधिकार प्राप्त थिएन । कुरैशको यस कटुताको नीतिबाट यो भय थियो कि मुसलमानहरुका भावना पनि भड्किन्थ्यो तथा उनी पनि यसलाई आफ्नो मर्यादाको समस्या बनाएर मक्का जानुमा अडिग हुनजान्थे, जसबाट दुबैमा लडाई हुनजान्थ्यो तथा यो लडाई मुसलमानहरुका लागि बडो खतरनाक हुन्थ्यो (जस्तो कि पहिला संकेत दिइसकिएको छ) यसकारण अल्लाहले मुसलमानहरुका हृदयमा शान्ति उतारदियो अर्थात् उनमा धैर्य तथा सहनशीलता पैदा गरिदियो तथा उनी नबी सल्लल्लाहु अलैहि व सल्लमका कथनानुसार हुदैबीयहमा रोकिरहे । आवेश तथा जोशमा आएर मक्का जानुको प्रयास गरेनन् । केही ज्ञाताहरु भन्दछन् कि यस अज्ञानताका पक्षपातबाट अभिप्राय कुरैशको त्यो आचरण हो जो उनीहरुले सम्झौताका लागि सन्धिका समय अपनाए । यो आचरण तथा सन्धि दुवै मुसलमानहरुका लागि प्रत्यक्ष रुपले असहनीय थियो । किन्तु परिणामका आधारमा किनकि त्यसमा इस्लाम तथा मुसलमानहरुको अति उत्तम लाभ थियो, यसकारण अल्लाहले मुसलमानहरुलाई अति अप्रियता तथा बोझका उपरान्त पनि त्यसलाई स्वीकार्नुको साहस दियो । यसको संक्षिप्त विवरण यसप्रकार छ कि जब रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले मक्काका कुरैशद्वारा पठाइएका

وَاَلْزَمَهُمْ كَلِمَةَ التَّقْوٰى وَكَانُوْٓا اَحَقَّ بِهَا وَاَهْلَهَا ۭ وَكَانَ اللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمًا ۝۲۶

मुसलमानहरुलाई संयमको कुरामा दृढ राख्यो[1] तथा उनीहरु यसका योग्य तथा अधिक पात्र थिए तथा अल्लाह (तआ़ला) प्रत्येक वस्तुलाई राम्ररी जान्दछ ।

प्रतिनिधिहरुको यो कुरा मानिहाल्नु हो कि यसवर्ष मुसलमान उमराका लागि मक्का जाने छैनन् तथा यहींबाट फर्किहाल्नेछन् त उहाँले आदरणीय अली रज़ीयल्लाहु अन्हुलाई सन्धिपत्र लेख्नुको आदेश दिनुभयो । उनले उहाँका आदेशले बिस्मिल्लाहिर्रहमानिररहीम लेख्नुभयो । उनीहरुले यसमाथि आलोचना गरे कि रहमान, रहीम (दयावान, कृपानिधि) लाई हामी जान्दैनौं । हामीकहाँ जुन नाम प्रयुक्त हुन्छ त्यसका साथ अर्थात् बेइस्मिक अल्लाहुम्म (हे अल्लाह, तिम्रो नामबाट) लेख । उहाँले यस्तै लेख्न लगाउनुभयो । उहाँले अलीलाई यस्तै लेख्न लगाउनु भयो, “यो त्यो सन्धिपत्र हो जसमा मुहम्मद रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) (ईशदूत) ले मक्कावासीहरुसित सम्झौता गरेका छन् ।” कुरैशका प्रतिनिधिहरुले भने कि मतभेदका आधार त तपाईंको रिसालत (ईशदूत हुनु) नै हो । यदि हामीले तपाईंलाई अल्लाहको सन्देशवाहक मान्दछौं भने यसका पश्चात झगडा नै के रहन्छ ? अनि रोक्नुको आवश्यकता नै के छ ? यहाँ तपाईं मोहम्मदुर्ररसूलुल्लाहको साटो मुहम्मद पुत्र अब्दुल्लाह लेख्नुस् । उहाँले आदरणीय अलीलाई यस्तै लेख्नुको आदेश दिनुभयो । यो मुसलमानहरुका लागि अति उत्तेजनाको विषय थियो । यदि अल्लाहले मुसलमानहरुमाथि शान्ति नउतारेको भए त उनीहरुले कहिल्यै सहन गर्न सक्दैनथे । आदरणीय अली रज़ीयल्लाहु अन्हुले आफ्ना हातले मुहम्मदुर्रसूलुल्लाहका शब्द मेटाउन तथा केर्नबाट इन्कार गरिदिनुभयो, जसलाई स्वयं उहाँले मेटाउनु भयो तथा त्यस स्थानमा पवित्र हातले मुहम्मद पुत्र अब्दुल्ला लेख्न लगाउनुभयो । सम्झौता अथवा सन्धिमा तीन कुरा लेखिए । (१) मक्कावासीमध्ये जो उहाँका पासमा मुसलमान भएर आउनेछ उसलाई फिर्ता गरिदिइनेछ । (२) जो मुसलमान मक्कावासीहरुसित गई मिल्नेछ उनी त्यसलाई फिर्ता गर्न बाध्य हुनेछैन । (३) मुसलमान आगामी वर्ष मक्का आउनेछन् तथा त्यहाँ तीन दिन रहनसक्नेछन् । किन्तु शस्त्र साथमा ल्याउन अनुमति हुनेछैन । (सहीह मुस्लिम, किताबुल जिहाद, बाबु सुल्हिल हुदैबीयह फिल हुदैबियह) तथा यसका साथ दुईटा कुरा अरु लेखिए (१) दस (१०) वर्ष लडाई स्थगित रहनेछ । (२) कबायेल मध्येबाट जो चाहन्छ मुसलमानहरुका साथ तथा जो चाहन्छ कुरैशका साथ हुनजाओस् ।

[1]यसबाट अभिप्राय तौहीद तथा रिसालतको सूत्र “लाइलाहा इल्लल्लाह मोहम्मदूर्रसूलुल्लाह” हो । जसलाई हुदैबियहका दिन मुश्रिकीन (बहुदेववादीहरु) ले इन्कार गरे । (इब्ने कसीर) अथवा त्यो धैर्य तथा शान्ति (सम्मान) हो जसको प्रदर्शन उनीहरुले हुदैबियहमा गरे, अथवा त्यो प्रतिज्ञाको पालन तथा त्यसमाथि दृढता हो जो संयमको परिणाम हो । (फ़तहुल क़दीर)

لَقَدْ صَدَقَ اللّٰهُ رَسُوْلَهُ الرُّءْيَا بِالْحَقِّ ۚ لَتَدْخُلُنَّ الْمَسْجِدَ الْحَرَامَ اِنْ شَآءَ اللّٰهُ اٰمِنِيْنَ ۙ مُحَلِّقِيْنَ رُءُوْسَكُمْ وَمُقَصِّرِيْنَ ۙ لَا تَخَافُوْنَ ؕ فَعَلِمَ مَا لَمْ تَعْلَمُوْا فَجَعَلَ مِنْ دُوْنِ ذٰلِكَ فَتْحًا قَرِيْبًا ﴿٢٧﴾

(२७) वास्तवमा अल्लाह (तआ़ला) ले आफ्ना रसूललाई स्वप्न सत्य देखाए कि यदि अल्लाहले चाहयो भने तिमी अवश्य पूर्ण शान्ति-सुरक्षाका साथ मस्जिदे हराममा प्रवेश गर्नेछौ, टाउको मुण्डन गराउँदै तथा टाउकाका कपाल कटाउँदै (शान्तिसँग) निर्भीक भएर,[1] त्यो ती कुराहरुलाई जान्दछ जसलाई तिमी जान्दैनौ,[2] त उसले त्यसभन्दा पहिला एउटा निकटको विजय तिमीलाई प्रदान गऱ्यो ।[3]

هُوَ الَّذِيْٓ اَرْسَلَ رَسُوْلَهُ بِالْهُدٰى وَدِيْنِ الْحَقِّ لِيُظْهِرَهُ عَلَى الدِّيْنِ

(२८) त्यही हो जसले आफ्ना रसूललाई पथप्रदर्शन एवं सत्य-धर्मका साथ पठायो ताकि त्यसलाई प्रत्येक धर्ममाथि प्रभावि[4] गरोस् तथा अल्लाह तआ़ला .

[1]हुदैबियहको घटनाभन्दा पहिला रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमलाई स्वप्नमा मुसलमानहरुका साथ बैतुल्लाह (अल्लाहका घर काअबा) मा गई परिक्रमा तथा उमरा गरिरहेको देखायो । नबीको सपना प्रकाशनाका बराबर हुन्छ । तैपनि यस सपनामा यो निश्चित थिएन कि यो यसैवर्ष हुनेछ, किन्तु नबी सल्लल्लाहु अलैहि व सल्लम मुसलमान यसलाई ठूलो शुभसूचना ठान्दै उमराका लागि तुरुन्त तयार भइहाले, यसका लागि जनसाधारणमा घोषणा गराउनुभयो तथा हिंडिहाल्नुभयो, अन्तमा हुदैबीयहमा त्यो सम्झौता भयो, जसको विवरण अहिले गुज्रयो जबकि अल्लाहका ज्ञानमा यो स्वप्न आगामी वर्ष साकार हुनुथियो । जस्तो कि आगामी वर्ष मुसलमानहरुले अति शान्तिपूर्वक यो उमरा गरे तथा अल्लाहले आफ्ना पैग़म्बरका सपनालाई साँचो गरेर देखायो ।

[2]अर्थात् यदि हुदैबीयहका स्थानमा सन्धि नभएको भए त मक्कामा आबाद निर्बल मुसलमानहरुलाई हानि पुग्थ्यो । सन्धिका यी लाभहरुलाई अल्लाह नै जान्दथ्यो ।

[3]यसबाट खैबर तथा मक्काको विजयका अतिरिक्त सन्धिका परिणाम स्वरुप जो अधिकांश मुसलमान भए, त्यो पनि तात्पर्य छ, किनकि त्यो पनि विजयको एक महान रुप हो । हुदैबीयह सम्झौताका अवसरमा मुसलमानले मक्कामा विजेता स्वरुप प्रवेश गरे त उनको संख्या दस हजार थियो ।

[4]इस्लामको यो प्रभाव त अन्य धर्महरुमाथि प्रमाणहरुका आधारमा त हर समय मान्य छ । तैपनि सांसारिक तथा फ़ौजी आधारमा पनि प्रथम युगमा तथा त्यसका पश्चात जबसम्म मुसलमान आफ्ना धर्ममा कार्यरत रहे उनको प्रभुत्व रहयो, तथा आज पनि यो भौतिक प्रभुत्व सम्भव छ

كَلَّهُ ۚ وَكَفَىٰ بِاللَّهِ شَهِيدًا ﴿٢٨﴾

पर्याप्त छ साक्ष्य दिनेवाला ।

مُحَمَّدٌ رَّسُولُ اللَّهِ ۚ وَالَّذِينَ مَعَهُ أَشِدَّاءُ عَلَى الْكُفَّارِ رُحَمَاءُ بَيْنَهُمْ ۖ تَرَاهُمْ رُكَّعًا سُجَّدًا يَبْتَغُونَ فَضْلًا مِّنَ اللَّهِ وَرِضْوَانًا ۖ سِيمَاهُمْ فِي وُجُوهِهِم مِّنْ أَثَرِ السُّجُودِ ۚ ذَٰلِكَ مَثَلُهُمْ فِي التَّوْرَاةِ ۚ وَمَثَلُهُمْ فِي الْإِنجِيلِ كَزَرْعٍ أَخْرَجَ شَطْأَهُ فَآزَرَهُ فَاسْتَغْلَظَ فَاسْتَوَىٰ عَلَىٰ سُوقِهِ يُعْجِبُ الزُّرَّاعَ لِيَغِيظَ بِهِمُ الْكُفَّارَ ۗ وَعَدَ اللَّهُ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ مِنْهُم

(२९) मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) अल्लाहका रसूल हुन् तथा जो उनका साथ छन्, काफ़िरहरुमाथि कठोर छन् आपसमा दयालु छन्, तिमीले उनलाई देख्नेछौ कि रुकूअ तथा सज्दाहरु गरिराखेका छन्, अल्लाह (तआला) को कृपा तथा प्रसन्नताको कामनामा छन् । उनका निशान उनका मुखमा सज्दाहरुको प्रभावले छ, उनको यही गुण (उदाहरण) तौरातमा छ तथा उनको उदाहरण इंजील[1] मा छ त्यस खेतीका समान जसले आफ्नो अंकुर निकाल्यो,[2] अनि त्यसलाई मजबूत गऱ्यो तथा त्यो मोटो भयो, अनि आफ्ना तनामा सोझो उभिहाल्यो तथा किसानहरुलाई प्रसन्न गर्नथाल्यो[3] ताकि उनका

---

जबकि मुसलमान, मुसलमान बनिहालून् ।

﴿ وَأَنتُمُ الْأَعْلَوْنَ إِن كُنتُم مُّؤْمِنِينَ ﴾

"तिमी नै प्रभावशाली (एवं उच्च) रहनेछौ यदि तिमी ईमान्दार हौ ।" (आले-इमरान-१३९)

यो धर्म प्रभावि हुनलाई नै आएको हो, पराजित हुनका लागि होइन ।

[1] إِنْجِيل (इंजील) मा वक्फ़ (रोकिनु) को दशामा यो अर्थ हुनेछ कि उनका जो यो गुण कुर्आनमा वर्णित छ, उनका यही गुण तौरात तथा इंजीलमा पनि उल्लेख छ । तथा अगाडी كَزَرْعٍ मा यसभन्दा पहिला هُمْ (हुम) लुप्त हुन्छ, तथा केही ज्ञाताहरु فِي التَّوراة मा वक्फ गर्दै (रोकिंदै) छन् अर्थात् उनको उपरोक्त गुण तौरातमा छ तथा مَثَلُهُمْ فِي الإنجيل लाई كَزَرْعٍ का साथ मिलाइन्छन् । अर्थात् इंजीलमा उनको उदाहरण त्यस खेतीका समान छ । (फ़तहुल क़दीर)

[2] شَطْأَهُ बिरुवाको त्यो प्रथम प्रकटन हो जो दाना (गेडा) च्यातेर अल्लाहको शक्तिले (अल्लाहका सामर्थ्यले) बाहिर निस्कन्छ ।

[3]यो सहाबा किरामको दृष्टान्त वर्णन गरिएको छ । आरम्भमा उनी कम थिए, अनि अधिक तथा शक्तिशाली भइहाले, जस्तो खेती आरम्भमा क्षीण हुन्छ,

مَّغْفِرَةً وَّأَجْرًا عَظِيمًا ﴿٢٩﴾

कारण काफ़िरहरुलाई गिज्याओस्,[1] तथा ईमानवाला तथा सत्कर्मीहरुसित अल्लाहले क्षमाको तथा निकै ठूला पुण्यको वाचा गरेको छ ।[2]

سُورَةُ الحُجُرَاتِ

## सूरतुल हुजुरात-४९

सूर: हुजुरात* मदीनामा अवतरित भएको यसमा ७८ आयतहरु तथा २ रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं कृपालु छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تُقَدِّمُوا بَيْنَ يَدَيِ اللَّهِ وَرَسُولِهِ

(१) हे ईमान भएकाहरु ! अल्लाह तथा त्यसका रसूलभन्दा अगाडी नबढ[3] तथा अल्लाहसित तर्सदै गर ।

प्रतिदिन दृढ हुँदैजान्छ यहाँसम्मकि दृढ तना (बोट) मा उभिहाल्छ ।

[1]अथवा काफ़िर क्रोधमा ग्रस्त होऊन् । अर्थात् सहाबा केराम रज़ीयल्लाहु अन्हुमको बढी प्रभाव तथा उनको प्रतिदिन बढिराखेको शक्ति एवं बल काफ़िरहरुका लागि क्रोध तथा रोषको कारण थियो, किनकि यसबाट इस्लामको क्षेत्र बढिराखेको थियो तथा कुफ्र सीमित भइराखेको थियो । यस आयतबाट तर्क दिंदै केही धर्मविद्वानहरुले सहाबा केरामसित ईर्ष्या तथा शत्रुता राख्नेहरुलाई काफ़िर सिद्ध गरेका छन् ।

[2]यस पूरा आयतको एक-एक भाग सहाबा किरामको प्रतिष्ठा एवं प्रधानता, पारलौकिक मोक्ष तथा महान पुण्यलाई स्पष्ट गरिराखेको छ । यसका पश्चात पनि सहाबा (नबीका साथीहरु) का ईमानमा सन्देह गर्नेवाला मुसलमान हुनुको दावा गर्दछ भने त्यसलाई मुसलमान हुनुका दावीमा कसरी सच्चा ठान्न सकिन्छ ?

*यो तिवाले मुफ़स्सल (विस्तृत) को प्रथम सूर: हो, हुजोरातदेखि नाज़िआतसम्मका सूरतहरु "तिवाले मुफ़स्सल" कहलाउँछन् । केही विद्वानहरुले सूर: 'क़ाफ' लाई यसमध्येका प्रथम सूर: भनेका छन् । (इब्ने क़सीर, फ़तहुल क़दीर) यिनको फज्र (भोर) को नमाज़मा पढ्नु मस्नून तथा मुस्तहब (उत्तम) छ । सूर: अबसदेखि सूरहतुश्शम्स सम्म औसाते मुफ़स्सल (मध्यम) तथा सूर: जुहादेखि अन्नाससम्म किसारे मुफ़स्सल (अल्प) हुन् । जोहर तथा ईशामा औसत तथा मग़रिबमा किसार पढ्नु मुस्तहब (उत्तम) छ । (ऐसरुत्तफ़ासीर)

[3]यसको अभिप्राय हो कि धर्मका विषयमा स्वयं कुनै निर्णय नगर, न आफ्नो समझ तथा विचारलाई प्रधानता देउ, बरु अल्लाह तथा रसूलको आज्ञाको पालन गर । आफ्नो तर्फबाट धर्ममा अधिकता वा बिदआत (नयाँ कुराहरु) बनाउनु अल्लाह एवं रसूलभन्दा बढ्नुको दुस्साहस हो, जो कुनै पनि ईमान भएका लागि योग्य छैनन् ।

وَاتَّقُوا اللّٰهَ ۭ اِنَّ اللّٰهَ سَمِيْعٌ عَلِيْمٌ ①

निःसन्देह अल्लाह (तआला) सुन्ने-जान्नेवाला छ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَرْفَعُوْٓا اَصْوَاتَكُمْ فَوْقَ صَوْتِ النَّبِيِّ وَلَا تَجْهَرُوْا لَهٗ بِالْقَوْلِ كَجَهْرِ بَعْضِكُمْ لِبَعْضٍ اَنْ تَحْبَطَ اَعْمَالُكُمْ وَاَنْتُمْ لَا تَشْعُرُوْنَ ②

(२) हे ईमानवालाहरु ! आफ्नो आवाजलाई नबीको आवाजभन्दा उच्च नगर तथा उनकोभन्दा उच्च स्वरमा कुरा नगर जस्तो एक-आपसमा गर्दछौ । (कहीं यस्तो नहोस्) कि तिम्रा कर्म व्यर्थ भइहालून् तथा तिमीलाई थाहा पनि नहोस् ।[1]

اِنَّ الَّذِيْنَ يَغُضُّوْنَ اَصْوَاتَهُمْ عِنْدَ رَسُوْلِ اللّٰهِ اُولٰۗىِٕكَ الَّذِيْنَ امْتَحَنَ اللّٰهُ قُلُوْبَهُمْ لِلتَّقْوٰى ۭ لَهُمْ مَّغْفِرَةٌ وَّاَجْرٌ عَظِيْمٌ ③

(३) वास्तवमा जो रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) का समक्ष आफ्नो आवाज मसिनो राख्दछन्, यही ती मानिस हुन् जसका हृदयलाई सदाचारका लागि जाँचेको छ । उनका लागि क्षमा छ तथा बडो पुण्य छ ।[2]

यसैप्रकार कुनै फतवा (धर्माज्ञा) कुर्आन तथा हदीसमा विचार नगरिकन नदिइयोस् तथा दिनुका पश्चात यदि धार्मिक सुत्रहरु (कुर्आन तथा हदीस) का विपरीत हुन स्पष्ट भइहालोस् त त्यसमा अडिग रहनु पनि यस आयतमा दिएको आज्ञाको प्रतिकूल छ । मुसलमानको आचरण त अल्लाह एवं रसूलका अगाडी समर्पण तथा अनुपालनका लागि टाउको झुकाइदिनु हो, न कि उनका मुक़ाबिलामा आफ्नो कुरा अथवा कुनै इमामका विचारमा अडिरहनु ।

[1]यसमा रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमका लागि आदर-सम्मानको वर्णन छ, जसको प्रत्येक मुसलमानसित माँग छ । प्रथम सम्मान यो हो कि उहाँ सल्लल्लाहु अलैहि व सल्लमको उपस्थितिमा जब कुरा गर्छौ त तिम्रो आवाज नबी सल्लल्लाहु अलैहि व सल्लमको आवाजभन्दा उच्च नहोस् । दोस्रो सम्मान हो, जब नबी सल्लल्लाहु अलैहि व सल्लमसित कुरा गर्दछौ त अति गम्भीरता तथा शान्तिसित गर । यस्तो उच्च स्वरमा नगर जस्तै आपसमा एक-अर्कासित गर्दछौं । केही ज्ञाताहरुले भने कि हे मुहम्मद ! हे अहमद नभन, बरु आदरले 'हे अल्लाहका रसूल' भनेर सम्बोधित गर । यदि आदर तथा सम्मानका यी माँगहरुलाई ध्यानमा राख्ने छैनौ भने निरादरको सम्भावना छ, जसबाट असावधानीमा तिम्रा कर्म व्यर्थ हुनसक्छन् । यस आयतका अवतरणका कारणका लागि हेर्नुस् सहीह बुख़ारी, तफ़सीर सूरतिल हुजुरात । तैपनि आदेशानुसार यो आयत सामान्य छ ।

[2]यसमा ती मानिसहरुको प्रशंसा छ जो रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमको मान-मर्यादाको ध्यान राख्दै आफ्नो आवाज मसिनो राख्दथे ।

إِنَّ الَّذِينَ يُنَادُونَكَ مِن وَرَاءِ الْحُجُرَاتِ أَكْثَرُهُمْ لَا يَعْقِلُونَ ۝٤

(४) निःसन्देह जो मानिस तपाईंलाई कोठाहरुका पछाडीबाट पुकार्दछन् उनीहरुमध्ये अधिकतर (पूर्णतः) बुद्धिहीन छन्।[1]

وَلَوْ أَنَّهُمْ صَبَرُوا حَتَّىٰ تَخْرُجَ إِلَيْهِمْ لَكَانَ خَيْرًا لَّهُمْ ۚ وَاللَّهُ غَفُورٌ رَّحِيمٌ ۝٥

(५) तथा यदि यिनीहरु यहाँसम्म धैर्य राख्दछन् कि तपाईं (स्वयं) उनका पासमा आइहाल्नु हुन्थ्यो त यही उनका लागि श्रेष्ठकर हुन्थ्यो,[2] तथा अल्लाह (तआला) क्षमावान, दयावान हुनुहुन्छ।[3]

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِن جَاءَكُمْ فَاسِقٌ بِنَبَإٍ فَتَبَيَّنُوا أَن تُصِيبُوا

(६) हे ईमान भएकाहरु! यदि तिमीलाई कुनै भ्रष्टाचारीले सूचना दिन्छ त तिमी त्यसको राम्ररी छानबिन गरिहाल्ने गर,[4] (यस्तो नहोस्) कि अनभिज्ञताका

[1]यो आयत क़बीला बनू तमीमका केही आराबीहरु (गवाँर मानिसहरु) का विषयमा अवतरित भयो, जसले एक दिन दिउँसोको समय थियो जो रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमका विश्रामको समय थियो, कोठाबाट बाहिर उभेर जनसाधारणका शैलीमा हे मुहम्मद, को आवाज लगायो, ताकि उहाँ सल्लल्लाहु अलैहि व सल्लम बाहिर आऊन्। (मुसनद अहमद ३/४८८-६/३९४) अल्लाहले भन्नुभयो कि यिनीहरुमा अधिकतर बुद्धिहीन छन्। यसको अर्थ यो भयो कि नबी सल्लल्लाहु अलैहि व सल्लमका प्रताप तथा उहाँको मान-मर्यादाका माँगहरुलाई ध्यान नराख्नु मूर्खता हो।

[2]अर्थात् उहाँ सल्लल्लाहु अलैहि व सल्लमका निस्कनुका प्रतिक्षा गर्दथे तथा उहाँलाई पुकार्नमा शीघ्रता गर्दैनथे त धर्म तथा संसार दुबै रुपले उत्तम हुन्थ्यो।

[3]यसकारण पकड गरेन बरु भविष्यका लागि आदर तथा सम्मान गर्नुमा जोड दिइदियो।

[4]यो आयत अधिकतर भाष्यकारहरुका विचारमा आदरणीय वलीद बिन उक्बाका सम्बन्धमा अवतरित भएको हो, जसलाई नबी सल्लल्लाहु अलैहि व सल्लमले बनू मुस्तलिकका सदकाहरु (धर्मदान) वसूल गर्नका लागि पठाउनु भएको थियो। किन्तु उनले आएर सूचना दिए कि उनले ज़कात दिनबाट इन्कार गरिदिएका छन्, जसपश्चात उहाँले उनीमाथि आक्रमण गर्नुको इरादा गर्नुभयो, पछि थाहा भयो कि यो कुरा गलत थियो तथा वलीद रज़ीयल्लाहु अन्हु त्यहाँ जाँदै गएनन्। किन्तु प्रमाण तथा घटना दुबैका आधारमा यो कथन सही छैन। यसकारण यसलाई एक सहाबीमाथि थोप्नु सही छैन। तैपनि अवतरणका कारणको बहसबाट अलग भएर यसमा एउटा अति महत्वपूर्ण नियम वर्णन गरिएको छ, जसको व्यक्तिगत तथा सामूहिक दुबै सतहहरुमा बडो महत्व छ। प्रत्येक व्यक्ति तथा प्रशासनको यो उत्तरदायित्व हो कि त्यसका पासमा जुन पनि सूचना आउँछ विशेषरुपले कुकर्मी दुराचारी तथा उपद्रवी प्रकारका मानिसहरुका तर्फबाट त पहिला त्यसको पत्ता लगाइयोस् ताकि भ्रान्तिमा

قَوْمًا بِجَهَالَةٍ فَتُصْبِحُوا عَلَىٰ مَا فَعَلْتُمْ نَدِمِينَ ۝٦

कारण कुनै समुदायलाई हानि पुऱ्याइदेउ, पछि आफूले गरेकोमाथि पछुतो गर ।

وَاعْلَمُوا أَنَّ فِيكُمْ رَسُولَ اللَّهِ ۚ لَوْ يُطِيعُكُمْ فِي كَثِيرٍ مِّنَ الْأَمْرِ لَعَنِتُّمْ وَلَٰكِنَّ اللَّهَ حَبَّبَ إِلَيْكُمُ الْإِيمَانَ وَزَيَّنَهُ فِي قُلُوبِكُمْ وَكَرَّهَ إِلَيْكُمُ الْكُفْرَ وَالْفُسُوقَ وَالْعِصْيَانَ ۚ أُولَٰئِكَ هُمُ الرَّاشِدُونَ ۝٧

(७) तथा जानीराख कि तिमीमा अल्लाहका रसूल मौजूद छन्[1] यदि उनी धेरै कुराहरुमा तिमीले भनेका कुरा गरिरहून् त तिमी कठिनाईमा परिहाल, परन्तु अल्लाह (तआला) ले ईमानलाई तिम्रा लागि प्रिय बनाइदिएको छ तथा त्यसलाई तिम्रा हृदयमा सुशोभित गरिदिएको छ र कुफ्रलाई एवं कुकर्महरुलाई तथा अवज्ञाकारितालाई तिम्रो दृष्टिमा अप्रिय बनाइदिएको छ । यिनै मानिस मार्ग प्राप्त छन् ।

فَضْلًا مِّنَ اللَّهِ وَنِعْمَةً ۚ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ۝٨

(८) अल्लाहका उपकार एवं अनुग्रहले,[2] तथा अल्लाह जान्ने तथा हिक्मतवाला छ ।

وَإِن طَائِفَتَانِ مِنَ الْمُؤْمِنِينَ اقْتَتَلُوا فَأَصْلِحُوا بَيْنَهُمَا ۖ

(९) तथा यदि मुसलमानहरुका दुई गुट आपसमा लडिहाल्छन् भने उनमा मेल-मिलाप गराइदिने गर ।[3] अनि यदि उनीहरुमध्ये एउटाले अर्कोमाथि

कसैका विपरीत कुनै कारवाही नहोस् ।

[1]जसको माँग यो हो कि उनको आदर तथा अनुगमन गर किनकि उनी तिम्रो हित अधिक जान्दछन्, यसकारण कि उनीमाथि प्रकाशना अवतरित हुन्छ । अतः तिमीले उनको अनुगमन गर, उनलाई आफ्नो अनुगामी बनाउने प्रयास नगर, किनकि यदि उनी तिम्रा पसन्दका कुराहरु मान्न आरम्भ गरिदिनुहुन्छ भने तिमी स्वयं नै विपदामा पर्न जानेछौ । जस्तै अर्को स्थानमा अल्लाहले भन्नुभयो :

﴿ وَلَوِ اتَّبَعَ الْحَقُّ أَهْوَاءَهُمْ لَفَسَدَتِ السَّمَاوَاتُ وَالْأَرْضُ وَمَن فِيهِنَّ ﴾

"यदि सत्य नै उनका स्वार्थहरुको अनुपालनकर्ता भइहालोस् त धर्ती तथा आकाश यो उनका मध्येका सबै कुरा अस्तव्यस्त हुनजानेछन् ।" (अल-मोमिनून-७१)

[2]यो आयत पनि सहाबा रज़ीयल्लाहु अन्हुमको प्रतिष्ठा तथा उनका ईमान तथा सुधार एवं संमार्गमा हुनुको खुला प्रमाण हो ।

[3]यस सन्धि (सुलह) को ढङ्ग यो हो कि उनलाई कुरआन तथा हदीसतिर बोलाइयोस् अर्थात् उनका प्रकाशमा उनका मतभेदको समाधान गरियोस् ।

فَإِنۢ بَغَتْ إِحْدَىٰهُمَا عَلَى ٱلْأُخْرَىٰ فَقَٰتِلُوا۟ ٱلَّتِى تَبْغِى حَتَّىٰ تَفِىٓءَ إِلَىٰٓ أَمْرِ ٱللَّهِ ۚ فَإِن فَآءَتْ فَأَصْلِحُوا۟ بَيْنَهُمَا بِٱلْعَدْلِ وَأَقْسِطُوٓا۟ ۖ إِنَّ ٱللَّهَ يُحِبُّ ٱلْمُقْسِطِينَ ⑨

अत्याचार गर्दछ भने तिमी (सबै) त्यस गुटसित जो अत्याचार गर्दछ लड यहाँसम्मकि त्यो अल्लाहका आदेशतिर फर्किहालोस् ।[१] यदि फर्केर आउँछ भने न्यायका साथ उनका बीच सन्धि गराइदेउ[२] तथा न्याय गर निःसन्देह अल्लाह (तआला) न्याय गर्नेहरुसित त प्रेम गर्दछ ।[३]

إِنَّمَا ٱلْمُؤْمِنُونَ إِخْوَةٌ فَأَصْلِحُوا۟ بَيْنَ أَخَوَيْكُمْ ۚ وَٱتَّقُوا۟ ٱللَّهَ لَعَلَّكُمْ تُرْحَمُونَ ⑩

(१०) (याद राख) समस्त मुसलमान भाइ-भाइ हुन्, त आफ्ना दुई भाइहरुमा मेलमिलाप गराइदिने गर ।[४] तथा अल्लाहसित तर्सदै रह, ताकि तिमीमाथि कृपा गरियोस् ।[५]

[१]अर्थात् अल्लाह तथा रसूलका आदेशानुसार आफ्ना मतभेद समाप्त गर्न तयार नहोस् तथा विद्रोहको नीति अपनाओस् त अरु मुसलमानहरुको दायित्व छ कि सबै मिलेर विद्रोहीहरुसित लडाईं गरून् यहाँसम्मकि त्यो अल्लाहका आदेशलाई मान्नका लागि तयार हुनजाओस् ।

[२]अर्थात् विद्रोही गिरोह विद्रोहबाट रोकियोस् त पछि न्यायका साथ अर्थात् कुर्आन तथा हदीसका प्रकाशमा दुवै गिरोहहरुका बीच सुलह (मेल-मिलाप) गराइयोस् ।

[३]तथा प्रत्येक विषयमा न्याय गर, यसकारण कि अल्लाह न्याय गर्नेहरुलाई उत्तम फल प्रदान गर्नेछ ।

[४]यो पूर्वका आदेशमा नै जोड दिइएको छ । अर्थात् जब मुसलमान आपसमा भाइ हुन् त सबको मूल ईमान भयो । अतः मूलका महत्वको माँग हो कि एउटै धर्ममा विश्वास राख्नेहरु आपसमा नलड्न् । बरु परस्पर हितैषी, सहयोगी तथा शुभ-चिन्तक रहून् । कहिल्यै गल्ती तथा भ्रमबाट उनमा दूरी एवं घृणा पैदा नहोस् तसर्थ त्यसलाई समाप्त गरेर आपसमा पुनः जोड दिइयोस् । (हेर्नुस् सूरः तौबा आयत नम्बर ७१ को व्याख्या)

[५]तथा प्रत्येक मामिलामा अल्लाहसित तर्स, सम्भवतः त्यसका कारण तिमी अल्लाहको दयाको पात्र बनिहाल । (आशाको कुरो) सम्बोधितका आधारमा छ । अन्यथा अल्लाहको दया त ईमानवालाहरु तथा सदाचारीहरुका लागि निश्चित छ ।

यस आयतमा विद्रोही समूहसित लड्नुको आदेश छ जबकि हदीसमा मुसलमानसित युद्धलाई कुफ्र भनिएको छ । यो कुफ्र त्यस समय हुनेछ जब मुसलमानसित अकारण युद्धलाई गरिन्छ । किन्तु यस युद्धको आधार विद्रोह हो त यो युद्ध न केवल उचित छ बरु यसको आदेश दिइएको छ जो जोड दिन तथा उत्तम हुनुको संकेत हो । यसैप्रकार विद्रोही गिरोहलाई कुर्आनले मोमिन नै भने, जसको अभिप्राय

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ لَا يَسْخَرْ قَوْمٌ مِّن قَوْمٍ عَسَىٰٓ أَن يَكُونُوا۟ خَيْرًا مِّنْهُمْ وَلَا نِسَآءٌ مِّن نِّسَآءٍ عَسَىٰٓ أَن يَكُنَّ خَيْرًا مِّنْهُنَّ ۖ وَلَا تَلْمِزُوٓا۟ أَنفُسَكُمْ وَلَا تَنَابَزُوا۟ بِٱلْأَلْقَٰبِ ۖ بِئْسَ ٱلِٱسْمُ ٱلْفُسُوقُ بَعْدَ ٱلْإِيمَٰنِ ۚ وَمَن لَّمْ

(११) हे ईमानवालाहरु ! पुरुष अरु पुरुषहरुको उपहास नगरून्, सम्भव छ कि यो उनीभन्दा श्रेष्ठ होऊन्,[१] तथा न महिलाहरु महिलाहरुको बहस गरून्, सम्भव छ कि यिनी उनीहरुभन्दा श्रेष्ठ होऊन् तथा आपसमा एक-अर्कामाथि आक्षेप (त्रुटि) नलगाउ[२] तथा न कसैलाई नराम्रो उपाधि देउ ।[३] ईमानका पश्चात अपशब्द बुरा नाम हो,[४] तथा

यो हो कि केवल विद्रोहका कारण जो महापाप छ, तिमी ईमानबाट निस्कने छैनौ, जस्तो कि ख़्वारिज तथा केही मुअतज़िलाको भ्रम छ कि महापाप ईमानबाट निस्किहाल्छ । अब केही अति महत्वपूर्ण नैतिक शिक्षाहरु मुसलमानहरुलाई दिइँदैछ ।

[१]एक व्यक्ति अर्को कुनै व्यक्तिको परिहास अर्थात् उपहास त्यस समय गर्दछ जब उसले आफूलाई त्यसभन्दा उत्तम तथा उसलाई हीन एवं पतीत ठान्दछ । हाँलाकि अल्लाहका समक्षको कुन कर्म तथा ईमानमा उत्तम छ तथा को छैन, यसलाई मात्र अल्लाहनै जान्दछ । अत: स्वयंलाई श्रेष्ठ तथा अन्यलाई पतीत ठान्नुको कुनै औचित्य नै छैन । यसकारणले आयतमा त्यसबाट रोकिएको छ । भन्दछन् कि स्त्रीहरुमा यो नैतिक रोग अधिक हुन्छ । यसकारण स्त्रीहरुको अलग्गबाट वर्णन गरेर विशेषरुपले उनीहरुलाई त्यसबाट रोकिएको छ । तथा रसूल सल्लल्लाहु अलैहि व सल्लमका कथनमा मानिसहरुलाई हीन ठान्नुलाई अहंकार भनिएको छ । اَلْكِبْرُ بَطَرُ الْحَقِّ وَغَمْطُ النَّاسِ (अबू दाऊद, किताबुल लिबास, बाबु माजाअ फिल किब्रे) तथा घमण्ड अल्लाहलाई अत्यन्त अप्रिय छ ।

[२]अर्थात् एक-अर्कामाथि कटाक्ष नगर, जस्तै तिमी अमूकका पुत्र हौ, तेरी आमा यस्तो-उस्तो छे, तिमी अमूक वंशका हौ आदि ।

[३]अर्थात् आफ्नो तर्फबाट उपहास अप्रिय हुन्छन् अथवा राम्रा-भला नामहरुलाई बिगाडेर बोल्नु यो تنابز بالألقاب हो जसबाट रोकिएको छ ।

[४]अर्थात् यसप्रकार नाम बिगाडेर अथवा नराम्रो नाम राखेर बोलाउनु अथवा इस्लाम स्वीकार अथवा तौबा गरिहाल्नुका पश्चात उसलाई पूर्व धर्म अथवा पापसित सम्वन्धित गरेर सम्वोधित गर्नु, जस्तै हे काफ़िर, हे व्यभिचारी, हे शराबी आदि, नराम्रो काम हो । الاِسْمُ यहाँ الذِّكْر का अर्थमा छ, अर्थात् بئس الاسم الذي يذكر بالفسق بعد دخولهم في الإيمان (फ़तहुल क़दीर) हो, केही ती नाम जो विशेष गुणका कारण हुन्छन्, यही ज्ञाताहरुका निकट यसबाट अलग छन् जो कुनै कुराका लागि विख्यात हुनजाऊन् तथा उनी यसमाथि आफ्ना मनमा दुखी नहून्, जस्तै कसैलाई लंगडा वा कालीया जस्तै शब्द प्रयोग गरी पुकार्नु इस्लामी

يَتُبْ فَأُولَٰئِكَ هُمُ الظَّالِمُونَ ⑪

क्षमा माँग्दैनन् ती नै अत्याचारीहरु हुन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اجْتَنِبُوا كَثِيرًا مِّنَ الظَّنِّ إِنَّ بَعْضَ الظَّنِّ إِثْمٌ وَلَا تَجَسَّسُوا وَلَا يَغْتَب بَّعْضُكُم بَعْضًا ۚ أَيُحِبُّ أَحَدُكُمْ أَن يَأْكُلَ لَحْمَ أَخِيهِ

(१२) हे ईमानवालाहरु ! अधिकांश नराम्रा अनुमानहरु (धारणाहरु) बाट बच; विश्वास गर कि केही नराम्रा अनुमान पाप हुन्,[1] तथा भेद खोल्ने नगर[2] र न तिमीमध्ये कोही कसैको छिद्रान्वेषण (पिठ्यूँ पछाडी) चुग्ली गरोस् ।[3] के तिमीहरुमध्ये कोही

शुभ आचरणमध्ये पनि मानिंदैन, यसर्थ यसबाट आफूलाई जोगाउनु त लोक र परलोक दुबैमा लाभदाय हुनेछ ।

[1] ظَنٌّ (जन्न) को अर्थ हो गुमान (ख्याल) गर्नु । अभिप्राय यो हो कि सदाचारी तथा सत्कर्मीहरुका विषयमा यस्ता गुमान राख्नु जो निर्मूल तथा आरोप एवं आक्षेपका अर्न्तगत आउँछन्, यसैकारण यसको अनुवाद नराम्रो अनुमान गरिन्छ तथा यसलाई हदीसमा أَكْذَبُ الْحَدِيثِ (सबभन्दा ठूलो झूठ) भनी यसबाट बच्नुमाथि जोड दिइएको छ إِيَّاكُمْ وَالظَّنَّ (बुखारी, किताबुल अदब, باب يا أيها الذين آمنوا اجتنبوا كثيرا من الظن (सहीह मुस्लिम, किताबुल बिर्रे बाबु तहरीमिज़्ज़न्ने वत् तजस्सुस) अन्यथा दुष्कर्मीहरु तथा दूराचारीहरुसित उनका पापहरुका कारण तथा उनका पापहरुमाथि बदगुमानी होइन जसलाई यहाँ पाप भनिएको छ तथा त्यसबाट बच्नुमाथि जोड दिइएको छ (إن الظَّنَّ الْقَبِيحَ بِمَنْ ظَاهِرُهُ الْخَيرُ لَا يَجُوزُ، وإنَّه لَا حَرَجَ فِي الظَّنِّ الْقَبِيحِ بِمَنْ ظَاهِرُهُ الْقَبِيحُ) "जो प्राय राम्रो देखिन्छ (कर्मको आधारमा) त्यसका सम्बन्धमा बद्‌गुमानी नराम्रो कुरो हो तथा जो पापले नराम्रो छ, त्यसका विषयमा बद्‌गुमानी नराम्रो होइन ।" (अल-कुर्तबी)

[2]अर्थात् यस खोजीमा रहनु कि कुनै दोष फेला परोस् ताकि त्यसलाई बदनाम गरियोस्, यो तज़स्सुस हो जसबाट रोकिएको छ । हदीसमा पनि यसबाट रोकिएको छ, बरु भनिएको छ कि यदि कसैको दोष अथवा त्रुटि तिम्रा ज्ञानमा आउँछ भने त्यसलाई लुकाउ, न कि मानिसहरुसित चर्चा गर्दै हिंड । वर्तमान युगमा स्वतन्त्रता तथा स्वाधीनताको निकै चर्चा छ । इस्लामले पनि छानबिनबाट रोकेर मानवको स्वतन्त्रता एवं स्वाधीनतालाई स्वीकार गरेको छ । परन्तु त्यस समयसम्म जबसम्मकि त्यो सामान्यरुपले निर्लज्जताको काम गर्दैन अथवा जबसम्म अरुहरुका लागि दुखको कारण बन्दैन । पाश्चात्यले खुल्ला स्वाधीनताको शिक्षा दिएर मानिसहरुलाई साधारण बिगाडको अनुमति दिएको छ जसबाट सामाजिक शान्तिको विनाश भइहालेको छ ।

[3] غِيبَةٌ (ग़ीबत) को अर्थ हो अरु मानिसहरुका समक्ष कसैको नराम्रो पक्ष तथा दोषको चर्चा गरियोस्, जसलाई त्यसले नराम्रो ठान्दछ । यदि उससित यस्ता कुरा जोडिन्छन् जुन उसमा छँदैछैन त त्यो आरोप (आक्षेप) हो । आफ्नो ठाउँमा दुबै घोर अपराध हुन् ।

مَيْتًا فَكَرِهْتُمُوهُ ۚ وَاتَّقُوا اللَّهَ ۚ إِنَّ اللَّهَ تَوَّابٌ رَّحِيمٌ ﴿١٢﴾

पनि आफ्ना मरेको भाइको मासु खान (प्रिय) ठान्दछ ? तिमीलाई त्यसबाट घृणा हुनेछ ।[1] तथा अल्लाहसित तर्सँदै गर । नि:सन्देह अल्लाह (तआ़ला) क्षमा स्वीकार गर्ने कृपालु छ ।

يَا أَيُّهَا النَّاسُ إِنَّا خَلَقْنَاكُم مِّن ذَكَرٍ وَأُنثَىٰ وَجَعَلْنَاكُمْ شُعُوبًا وَقَبَائِلَ لِتَعَارَفُوا ۚ إِنَّ أَكْرَمَكُمْ عِندَ اللَّهِ أَتْقَاكُمْ ۚ إِنَّ اللَّهَ عَلِيمٌ خَبِيرٌ ﴿١٣﴾

(१३) हे मानिसहरु ! हामीले तिमीलाई एकै पुरुष-स्त्रीबाट जन्म दिएका छौं[2] तथा त्यसकारण कि तिमी आपसमा एक-अर्कालाई चिन । जाति तथा प्रजाति,[3] अल्लाहको दृष्टिमा तिमी सबैमा त्यो सम्मानित छ जो सबभन्दा अधिक तर्सनेवाला छ ।[4] विश्वास गर कि अल्लाह जान्नेवाला राम्ररी परिचित छ ।

---

[1]अर्थात् कुनै मुसलमान भाइको कसैका अगाडी छिद्रअन्वेषण गर्नु यस्तै छ जस्तो मूर्दा र भाइको मासु खानु । मृत भाइको मासु खानु त कसैले रुचाउँदैन किन्तु ग़ीबत मानिसहरुको अति रुचिकर आहार हो ।

[2]अर्थात् आदम तथा हव्वा (अलैहिस्सलाम) बाट । अर्थात् तिमी सबैको मूल एउटै हो, एउटै आमा-बुवाको सन्तान हौ । अभिप्राय यो हो कि कसैका मात्र जाति तथा वंशका आधारमा कुनै गर्व गर्नुको आधार छैन, किनकि प्रत्येकको वंशक्रम आदरणीय आदमबाटै नै पाइन्छ ।

[3]شُعُوبٌ (शुऊब) شَعْبٌ (शाब) को बहुवचन हो, जाति अथवा ठूलो उपजाति شعب (शाब) का पश्चात قبيلة (क़बीला) अनि عُمارة (उमारा) अनि بطن (बत्न) अनि فصيلة (फ़सीला) त्यसपछि غيبة (ग़ीबत) छ । (फ़तहुल क़दीर) अर्थ यो हो कि अनेक जाति, उपजाति तथा परिवारहरुको विभाजन मात्र पहिचानका लागि हो ताकि आपसमा नाता जोड । यसको उद्देश्य परस्पर प्रधानता देखाउनु होइन, जस्तो कि दुर्भाग्यले जाति तथा वंशलाई प्रतिष्ठाको कारण तथा आधार बनाइहालिएको छ, जबकि इस्लामले आएर मेटाएको थियो तथा यसलाई मूर्खता भनेको थियो ।

[4]अर्थात् अल्लाहका समक्ष प्रधानताको माप परिवार, जाति अथवा वंशक्रम होइन, जो कुनै मानिसका अधिकारमा नै छैन बरु यो माप तक़्वा (संयम) हो, जसलाई अपनाउन मानिसका इरादा तथा वंशमा छ । यही आयत ती ज्ञानीहरुको तर्क हो जो विवाहमा जाति तथा वंशको बराबरीलाई आवश्यक ठान्दैनन् तथा मात्र धर्म (दीन) का आधारमा विवाहलाई रुचाउँछन् (इब्ने कसीर)

قَالَتِ الْأَعْرَابُ اٰمَنَّا ؕ قُلْ لَّمْ تُؤْمِنُوْا وَلٰكِنْ قُوْلُوْٓا اَسْلَمْنَا وَلَمَّا يَدْخُلِ الْاِيْمَانُ فِيْ قُلُوْبِكُمْ ؕ وَاِنْ تُطِيْعُوا اللّٰهَ وَرَسُوْلَهٗ لَا يَلِتْكُمْ مِّنْ اَعْمَالِكُمْ شَيْـًٔا ؕ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ⑭

(१४) ग्रामीणहरु भन्दछन् कि हामीले ईमान ल्यायौं। (तपाईं) (भनिदिनुस् कि तिमीले ईमान ल्याएनौ परन्तु तिमीले यो भन कि हामीले इस्लाम ल्यायौं (विरोध छाडेर आज्ञाकारी भइहाल्यौं) हाँलाकि अहिलेसम्म ईमान तिम्रा हृदयमा प्रवेश नै भएन।[1] तिमीले यदि अल्लाह तथा त्यसका रसूलको आज्ञाको पालना गर्न थाल्नेछौ भने अल्लाह तिम्रा कर्महरुमध्ये केही पनि कम गर्ने छैन । निःसन्देह अल्लाह (तआला) क्षमा गर्नेवाला दयालु छ।

اِنَّمَا الْمُؤْمِنُوْنَ الَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ ثُمَّ لَمْ يَرْتَابُوْا وَجٰهَدُوْا بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ فِيْ سَبِيْلِ اللّٰهِ ؕ اُولٰٓئِكَ هُمُ الصّٰدِقُوْنَ ⑮

(१५) ईमानवालाहरु त ती हुन् जो अल्लाहमाथि तथा त्यसका रसूलमाथि (दृढ) ईमान स्वीकार गरुन्, अनि शंका सन्देह नगरुन् तथा आफ्ना धनले र आफ्ना प्राणले अल्लाहको मार्गमा धर्मयुद्ध गरिरहून्। (आफ्ना ईमानको दावीमा) यिनै सच्चा (तथा सत्यवादी) हुन्।[2]

قُلْ اَتُعَلِّمُوْنَ اللّٰهَ بِدِيْنِكُمْ ؕ وَاللّٰهُ يَعْلَمُ مَا فِي السَّمٰوٰتِ

(१६) भनिदिनुस् कि के तिमी अल्लाहलाई आफ्नो धार्मिकतासित परिचित गराइराखेका छौ ?[3]

[1]केही भाष्यकारहरुका विचारले यी أعراب (आराब) सित अभिप्राय बनू असद तथा खुजैमाका अवसरवादी (मुनाफ़िक) हुन् जसले अकालमा सद्काहरु (दानहरु) को प्राप्तिका लागि अथवा हत्या तथा बन्दी हुनुका भयले मुखले इस्लाम व्यक्त गरेका थिए। उनका हृदय ईमान, सत्य विश्वास एवं शुद्ध मनबाट शून्य थिए। (फतहुल क़दीर) किन्तु इमाम इब्ने क़सीरका निकट यसबाट ती गाउँवासी अभिप्राय हुन् जो नयाँ मुसलान भएका थिए तथा ईमान अहिले उनमा पूर्णतः दृढ भएको थिएन किन्तु दावी उनीहरुले आफ्नो वास्तविकताभन्दा अधिक ईमानको गरेका थिए, जसपश्चात उनलाई यो शिक्षा दिइयो कि प्रथम पटकमै ईमानको दावी सही छैन, विस्तारै उन्नतिका पश्चात तिमी ईमानका दर्जासम्म पुग्नेछौ।

[2]न कि ती जो केवल मुखले ईमान व्यक्त गरिदिन्छन् तथा उपरोक्त कर्महरुको मूलसित कुनै प्रयोजन नै गर्दैनन्।

[3] تعليـــم तालीम (शिक्षा) यहाँ सूचना तथा खबर दिनुका अर्थमा छ। अर्थात آمنّا हामीले ईमान स्वीकार गऱ्यौं) भनेर तिमी आफ्ना धर्म तथा विश्वाससित अल्लाहलाई सूचित गरिराखेका छौ ? अथवा आफ्ना हृदयहरुको स्थिति अल्लाहलाई बताइराखेका छौ ?

وَمَا فِي الْأَرْضِ ۗ وَاللَّهُ بِكُلِّ شَيْءٍ عَلِيمٌ ⑯

अल्लाह प्रत्येक त्यस वस्तुसित जो आकाशहरु तथा धर्तीमा छ राम्ररी अवगत छ । तथा अल्लाह (तआ़ला) प्रत्येक वस्तुलाई जान्दछ ।[1]

يَمُنُّونَ عَلَيْكَ أَنْ أَسْلَمُوا ۖ قُلْ لَا تَمُنُّوا عَلَيَّ إِسْلَامَكُمْ ۖ بَلِ اللَّهُ يَمُنُّ عَلَيْكُمْ أَنْ هَدَاكُمْ لِلْإِيمَانِ إِنْ كُنْتُمْ صَادِقِينَ ⑰

(१७) उनीहरु आफू मुसलमान हुनुको तपाईंमाथि आभार जताउँछन्, (तपाईं) भनिदिनुस् कि आफू मुसलमान हुनुको आभार म माथि नराख, बरु अल्लाहको तिमीमाथि उपकार छ कि उसले तिमीलाई ईमानतिर मार्गदर्शन गऱ्यो यदि तिमी सत्यवादी हौ ।[2]

إِنَّ اللَّهَ يَعْلَمُ غَيْبَ السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَاللَّهُ بَصِيرٌ بِمَا تَعْمَلُونَ ⑱

(१८) विश्वास गर कि आकाशहरु तथा धर्तीका लुकेका कुरा अल्लाह राम्ररी जान्दछ, तथा जे-जति तिमी गरिराखेका छौ, त्यसलाई अल्लाह राम्ररी देखिराखेको छ ।

## सूरतु क़ाफ़-५०

سُورَةُ قٓ

सूर: क़ाफ़* मक्कामा अवतरित भयो तथा यसमा पैंतालीस आयतहरु एवं तीन रुकूअ छन् ।

[1] त के त्यो तिम्रा हृदयहरुको स्थिति अथवा तिम्रा ईमानको हक़ीकतसित सूचित छैन ?

[2] यही गाउँवासी (बद्दू) नबी सल्लल्लाहु अलैहि व सल्लमसित भन्दथे कि हेर्नुस् हामी मुसलमान भइहाल्यौं तथा तपाईंको सहायता गऱ्यौं, जबकि अरु अरब तपाईंसित लडिराखेका छन् । अल्लाहले उनको खण्डन गर्दै भन्नुभयो कि तिमी अल्लाहमाथि ईमान स्वीकार गर्नुको ऐहसान न जताउ किनकि यदि तिमी विशुद्धतासित मुसलमान भएका छौ भने यसको लाभ तिमीलाई नै प्राप्त हुनेछ, न कि अल्लाहलाई । यसकारण यो अल्लाहको तिमीमाथि उपकार छ कि उसले तिमीलाई इस्लाम स्वीकार गर्नुको सौभाग्य प्राप्त गऱ्यो न कि अल्लाहमाथि तिम्रो उपकार छ ।

*नबी सल्लल्लाहु अलैहि वसल्लम ईदको नमाज़मा सूर: क़ाफ़ तथा इक़्तरबतिस्साअ: पढ्ने गर्नुहुन्थ्यो । (सहीह मुस्लिम बाबु मा युक़रअ बिहि फी सलातिल ईदैन) प्रत्येक शुक्रबारका खुतबा (भाषण) मा पनि पढ्ने गर्नुहुन्थ्यो । (सहीह मुस्लिम, किताबुल जुमुअ:, बाबु तख़फ़ीफ़िस्सलाते वल खुत्बा) इमाम इब्ने क़सीर भन्नुहुन्छ कि दुवै ईदहरु तथा जुमामा पढ्नुको अभिप्राय यो हो कि ठूला जनसमूहहरुमा उहाँले यो सूर: पढ्ने गर्नुहुन्थ्यो किनकि यसमा उत्पत्तिको आरम्भ पुनर्जीवन, परलोक, हिसाब, स्वर्ग-नरक, पुण्य तथा दण्ड एवं प्रोत्साहन तथा चेतावनीको वर्णन छ ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु तथा अत्यन्त कृपालु छ ।

قٓ ۚ وَالْقُرْآنِ الْمَجِيدِ ①

(१) क़ाफ़ ! अत्यन्त महान (गरिमा भएको) यस कुर्‌आनको सौभाग्य छ ।[1]

بَلْ عَجِبُوا أَن جَاءَهُم مُّنذِرٌ مِّنْهُمْ فَقَالَ الْكَافِرُونَ هَٰذَا شَيْءٌ عَجِيبٌ ②

(२) बरु उनीहरुलाई आश्चर्य भयो कि उनका पासमा उनैमध्येबाट एउटा सचेतक आयो त काफ़िरहरुले भने कि यो एउटा आश्चर्यजनक वस्तु हो ।[2]

أَإِذَا مِتْنَا وَكُنَّا تُرَابًا ۖ ذَٰلِكَ رَجْعٌ بَعِيدٌ ③

(३) के जब हामी मरेर माटो भइहाल्नेछौं । त्यसपछि यो वापसी (फर्कनु) टाढाको कुरो हो ।[3]

قَدْ عَلِمْنَا مَا تَنقُصُ الْأَرْضُ مِنْهُمْ ۖ وَعِندَنَا كِتَابٌ حَفِيظٌ ④

(४) धर्ती जे-जति उनीहरुबाट घटाउँछ, त्यो हामीलाई ज्ञात छ तथा हामीसित सबै कण्ठ गरेको पुस्तक छ ।[4]

بَلْ كَذَّبُوا بِالْحَقِّ لَمَّا جَاءَهُمْ فَهُمْ فِي أَمْرٍ مَّرِيجٍ ⑤

(५) बरु उनीहरुले सत्य कुरालाई झूठा भने जबकि त्यो उनका पासमा पुगिसक्यो त उनीहरु एउटा उल्झन (अलमल) मा परिसकेका छन् ।[5]

---

[1] यसको उत्तर लुप्त छ لَتُبْعَثُنَّ (तिमी निश्चित कयामतका दिन उठाइनेछौ) । केही विद्वानहरु भन्दछन् कि यसको उत्तर पछिको विषय-वस्तुमा छ जसमा नबूअत (दूतत्व) र पुनर्जन्मको प्रमाण छ । (फ़तहुल क़दीर र इब्ने कसीर)

[2] हाँलाकि यसमा कुनै विचित्र कुरो थिएन । प्रत्येक नबी त्यसै जातिको एउटा व्यक्ति हुन्थ्यो जसमा उसलाई पठाइन्थ्यो । यसै हिसाबले मक्काका क़ुरैशलाई तर्साउनका लागि उनैमध्येबाट एक व्यक्तिलाई सन्देशवाहक (रसूल) रोजियो ।

[3] हाँलाकि बौद्धिक आधारमा यसमा कुनै असम्भावना छैन । अगाडी यसको केही स्पष्टीकरण छ ।

[4] अर्थात् धर्ती मानिसका मासु, अस्थि, हड्डी तथा रौं आदिलाई गलाएर खाइहाल्छन् अर्थात त्यसलाई खण्डित गरिदिन्छ, त्यो न केवल हाम्रा ज्ञानमा छ बरु हाम्रा पासमा लौहे महफ़ुज (सुरक्षित पुस्तक) मा पनि अंकित छ । अत: यी सबै अंशहरुलाई एकत्र गरी पुन: जीवन प्रदान गरिदिनु हाम्रा लागि कुनै कठिन काम होइन ।

[5] हक़ (सत्य कुरो) सित अभिप्राय पवित्र कुर्‌आन, इस्लाम अथवा मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको नबूअत (दूतत्व) छ । भावार्थ सबैको एउटै छ ।

أَفَلَمْ يَنظُرُوٓا۟ إِلَى ٱلسَّمَآءِ فَوْقَهُمْ كَيْفَ بَنَيْنَٰهَا وَزَيَّنَّٰهَا وَمَا لَهَا مِن فُرُوجٍ ⑥

(६) के उनीहरुले आकाशलाई आफूमाथि देखेनन् कि हामीले त्यसलाई कुन प्रकार बनाएका छौं[1] तथा त्यसलाई सेवा प्रदान गर्नेछौं ?[2] त्यसमा कुनै दरार (चिरा) छैन ।[3]

وَٱلْأَرْضَ مَدَدْنَٰهَا وَأَلْقَيْنَا فِيهَا رَوَٰسِىَ وَأَنۢبَتْنَا فِيهَا مِن كُلِّ زَوْجٍۭ بَهِيجٍ ⑦

(७) तथा धर्तीलाई हामीले ओछ्याइदिएका छौं तथा त्यसमाथि हामीले नाना-प्रकारका सुन्दर वस्तुहरु उमारदिएका छौं ।[4]

تَبْصِرَةً وَذِكْرَىٰ لِكُلِّ عَبْدٍ مُّنِيبٍ ⑧

(८) ताकि प्रत्येक (अल्लाहतिर) फर्कने भक्तका लागि दृष्टि एवं बुद्धिको साधन होस् ।[5]

وَنَزَّلْنَا مِنَ ٱلسَّمَآءِ مَآءً مُّبَٰرَكًا فَأَنۢبَتْنَا بِهِۦ جَنَّٰتٍ وَحَبَّ ٱلْحَصِيدِ ⑨

(९) तथा हामीले आकाशबाट शुभ पानी वर्षायौं तथा त्यसबाट बगैंचा एवं काटिने खेतका अन्न पैदा गऱ्यौं ।[6]

---

مَرِيجٍ (मरीज) को अर्थ अलमल, असमंजस्य अथवा सन्देह हो, अर्थात् यस्तो विषय जो उनीमाथि अल्भेको छ, जसले उनीहरु अलमलमा छन् । कहिले उसलाई जादूगर भन्दछन्, कहिले कवि तथा भविष्यवक्ता ।

[1]अर्थात् बिना स्तम्भका जसको उसलाई कुनै सहारा होस् ।

[2]अर्थात् ताराहरुबाट त्यसलाई सुशोभित गऱ्यो ।

[3]यसैप्रकार कुनै अन्तर तथा भिन्नता पनि छैन जस्तो अर्को स्थानमा अल्लाहले भन्नुभयो :

﴿ٱلَّذِى خَلَقَ سَبْعَ سَمَٰوَٰتٍ طِبَاقًا ۖ مَّا تَرَىٰ فِى خَلْقِ ٱلرَّحْمَٰنِ مِن تَفَٰوُتٍ ۖ فَٱرْجِعِ ٱلْبَصَرَ هَلْ تَرَىٰ مِن فُطُورٍ ۞ ثُمَّ ٱرْجِعِ ٱلْبَصَرَ كَرَّتَيْنِ يَنقَلِبْ إِلَيْكَ ٱلْبَصَرُ خَاسِئًا وَهُوَ حَسِيرٌ﴾

"जसले सात आकाश माथि-तल बनाए । (तिमी हे देख्नेहरु) अल्लाह दयालुको उत्पत्तिमा कुनै अनिमियतता देख्नै छैनौ, पुन: दृष्टि हालेर हेरिहाल के कुनै चिरा पनि देखिंदैछ ?" (अल-मुल्क-३,४)

[4]केही ज्ञाताहरुले زوج (ज़ौज) को अर्थ जोडा गरेका छन्, अर्थात सबै प्रकारका वनस्पति तथा वस्तुहरु जोडी-जोडी (भाले-पोथी) बनाएको छ । بهيج(बहीज) को अर्थ सुदृश्य, हराभरा तथा सुन्दर ।

[5]अर्थात् आकाश तथा धर्तीको रचना तथा अन्य वस्तुहरुको दर्शन तथा उनको ज्ञान प्रत्येक त्यस व्यक्तिको आँखा खोल्नु तथा सम्भनु एवं शिक्षा ग्रहण गर्ने हेतु छ, जो अल्लाहतिर ध्यान दिनेवाला छ ।

[6]काटिने अन्यसित अभिप्राय ती खेतीहरु हुन् जसबाट गहुँ, मकै, ज्वार, बाजरा, दालहरु तथा

وَالنَّخْلَ بٰسِقٰتٍ لَّهَا طَلْعٌ نَّضِيْدٌ ۝١٠

(१०) तथा ख़जूरहरुका अग्ला-अग्ला बृक्ष जसका गुच्छाहरु (थुङ्गा) पत्रमाथि पत्र गरिन्छन्।[१]

رِّزْقًا لِّلْعِبَادِ ۙ وَاَحْيَيْنَا بِهٖ بَلْدَةً مَّيْتًا ۭ كَذٰلِكَ الْخُرُوْجُ ۝١١

(११) भक्तहरुका जीविकाका लागि तथा हामीले पानीसित मृत नगरलाई जीवित गरिदियौं। यसैप्रकार (चिहानहरुबाट) निस्कनु हो।[२]

كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوْحٍ وَّاَصْحٰبُ الرَّسِّ وَثَمُوْدُ ۝١٢

(१२) उनीभन्दा पूर्व नूहका समुदायले तथा 'रस्स' वालाहरुको[३] तथा समुदायहरुले झुठ्लाएका थिए।

وَعَادٌ وَّفِرْعَوْنُ وَاِخْوَانُ لُوْطٍ ۝١٣

(१३) तथा आदले एवं फ़िरऔंनले तथा लूतका भाइहरुले।

وَّاَصْحٰبُ الْاَيْكَةِ وَقَوْمُ تُبَّعٍ ۭ كُلٌّ كَذَّبَ الرُّسُلَ فَحَقَّ وَعِيْدِ ۝١٤

(१४) तथा ऐकावालाहरु[४] ले तथा तुब्बअका समुदायले[५] (पनि झुठ्लाएका थिए)। सबैले पैग़म्बरहरुलाई झुठ्लाए[६] त मेरो यातनाको



धान आदि उब्जन्छन् तथा त्यसपछि तिनको भण्डार गरिन्छ।

[१] باسقات (बासिकात) को अर्थ طِوالاً شاهِقات अर्थात् अग्ला-लामा, طَلْعٌ (तलअ) खजूरको त्यो फल जो पहिला निस्कन्छ। نَضِيدٌ (नज़ीद) को अर्थ पत्रमाथि पत्र। वगैंचाहरुमा ख़जूरको फल पनि आउँछ किन्तु त्यसलाई अलग्ग विशेषरुपमा वर्णन गरिएको छ, जसबाट ख़जूरको त्यो महत्व स्पष्ट छ जो अरबमा त्यसलाई प्राप्त छ।

[२] अर्थात् जस्तो वर्षाले धर्तीलाई जीवन प्रदान गरिदिन्छौं तथा हरा-भरा बनाइदिन्छौं, यसैप्रकार केयामतका दिन हामीले कब्रहरुबाट मनुष्यहरुलाई जीवित गरी निकाल्नेछौं।

[३] रस्सका वासीहरुका निर्धारणका सम्बन्धमा भाष्यकारहरुमा बडो मतभेद छ। इमाम इब्ने ज़रीर तबरीले यस कथनलाई अधिमान दिएका छन् जसमा उनलाई अस्हाबे उखदूद (खाइहरुवाला) भनिएको छ, जसको चर्चा सूर: बुरूजमा छ। (विवरणका लागि हेर्नुस् तफ़सीर इब्ने क़सीर तथा फ़तहुल क़दीर, सूर: अल-फ़ुरकान-३८)।

[४] أَصْحَابُ الأَيكَةِ (अस्हाबुल ऐका) का लागि हेर्नुस् सुरतुश्शुअ्रा आयत १७६ को तटलेख।

[५] तुब्बअ जातिका लागि हेर्नुस् सूर: अद्दुख़ान आयत ३७ को तटलेख।

[६] अर्थात् उनीहरुमध्ये प्रत्येक लेख आफ्ना पैग़म्बरलाई झुठ्लाए। यसमा रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमका लागि सान्त्वना छ।मानौं वहाँका लागि भनिंदैछ कि तपाईं सल्लल्लाहु अलैहि वसल्लम आफ्ना समुदायद्वारा झुठ्लाउनु माथि शोकग्रस्त नहुनुस्, यसकारण कि यो कुनै नयाँ कुरा होइन,

वादा उनीमाथि सत्य भइहाल्यो ।

(१५) के हामी प्रथम पटक पैदा गर्नुबाट थाकिसकेका छौं ?[१] बरु यी मानिस नयाँ जीवनतिरबाट सन्देहमा छन् ।[२]

أَفَعَيِينَا بِالْخَلْقِ الْأَوَّلِ ۚ بَلْ هُمْ فِي لَبْسٍ مِّنْ خَلْقٍ جَدِيدٍ ﴿١٥﴾

(१६) हामीले मनुष्यलाई पैदा गरेका छौं तथा त्यसका हृदयमा जो विचार उत्पन्न हुन्छन् हामी उनीसित परिचित छौं[३] तथा हामी उसका प्राणनाड़ी सित पनि

وَلَقَدْ خَلَقْنَا الْإِنسَانَ وَنَعْلَمُ مَا تُوَسْوِسُ بِهِ نَفْسُهُ ۖ وَنَحْنُ أَقْرَبُ

तपाईं सल्लल्लाहु अलैहि व सल्लमभन्दा पहिला अम्बिया अलैहिमुस्सलामका साथ उनका समुदायहरुको यही आचरण रहेको छ । अर्को मक्कावासीहरुलाई चेतावनी छ कि विगत समुदायहरुले अम्बियालाई झुठ्लाए त देखिहाल कि उनको के परिणाम भयो ? के तिमी पनि आफ्ना लागि यही परिणाम मन पराउँछौ ? यदि होइन भने झुठ्लाउनुको मार्ग त्यागिदेउ तथा ईशदूत सल्लल्लाहु अलैहि व सल्लमका प्रति विश्वास गरिहाल ।

[१]कि केयामतका दिन फेरिबाट जीवन प्रदान गर्नु हाम्रा लागि कठिन हुनेछ । अर्थ यो हो कि जब पहिलो पटक पैदा गर्नु हाम्रा लागि कठिन थिएन त दोस्रो पटक जीवित गर्न त पहिलो पटक पैदा गर्नुभन्दा सरल छ । जस्तो अन्य स्थानमा भन्नुभयो :

﴿ وَهُوَ الَّذِي يَبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيدُهُ وَهُوَ أَهْوَنُ عَلَيْهِ ﴾

"त्यही हो जो प्रथम पटक सृष्टिको उत्पत्ति गर्दछ, पुन: दोस्रो पटक पैदा गर्नेछ तथा यो त उसका लागि अत्यन्त नै सहज छ ।" (अर्रूम-२७)

सूर: यासीन ७८,७९ मा पनि यो विषय वर्णन गरिएको छ तथा कुदसी हदीसमा छ, अल्लाह तआला भन्नुहुन्छ : "आदमको पुत्र मलाई यो भनेर दुख दिन्छ कि अल्लाह कदापि मलाई पुन: पैदा गर्नुमा सामर्थ्यवान छैन जस्तो मलाई पहिला पैदा गर्नु, न कि दोस्रो पटक पैदा गर्नु । (बुख़ारी, तफ़सीर सुरतिल एख्लास)

[२]अर्थात् यिनी अल्लाहका सामर्थ्यको इन्कार गर्दैनन्, बरु तथ्य यो हो कि प्रलय हुने तथा पुनर्जीवनमा शंका छ ।

[३]अर्थात् मानिस जो केही गुप्त राख्दछ तथा मनमा लुकाएर राख्दछ । त्यो सब हामी जान्दछौं । वस्वसा मनोगत विचारहरुलाई भनिन्छ जसको ज्ञान त्यस मनुष्यका अतिरिक्त कसैलाई हुँदैन । परन्तु अल्लाह यी विचारहरुलाई पनि जान्दछ । यसैकारण कुद्सी हदीसमा वर्णित छ । "मेरो अनुगामीहरुका मनोगत विचारहरुलाई अल्लाहले क्षमा गरिदिएको छ, अर्थात् उनीमाथि पकड गर्नेछैन जबसम्म त्यसलाई मुखले व्यक्त नगरोस् अथवा त्यसका अनुसार कर्म

إِلَيْهِ مِنْ حَبْلِ الْوَرِيدِ ﴿١٦﴾

अधिक त्यसका निकट छौं ।[1]

إِذْ يَتَلَقَّى الْمُتَلَقِّيَانِ عَنِ الْيَمِينِ وَعَنِ الشِّمَالِ قَعِيدٌ ﴿١٧﴾

(१७) जुन समय दुई लिनेवाला गई लिन्छन्, एक दायाँतिर तथा दोस्रो बायाँतिर बसेको छ ।

مَا يَلْفِظُ مِنْ قَوْلٍ إِلَّا لَدَيْهِ رَقِيبٌ عَتِيدٌ ﴿١٨﴾

(१८) (मनुष्य) मुखबाट कुनै शब्द निकाल्न पाउँदैन परन्तु त्यसका निकट रक्षक (पहरेदार) तयार छ ।[2]

وَجَاءَتْ سَكْرَةُ الْمَوْتِ بِالْحَقِّ ذَٰلِكَ مَا كُنْتَ مِنْهُ تَحِيدُ ﴿١٩﴾

(१९) तथा मृतको बेहोशी सत्य लिएर आइपुग्यो,[3] यही हो जसबाट तिमी तर्कदै हिंड्थ्यौ ।[4]

नगरोस्" (अल-बुख़ारी किताबुल ईमान, बाबु इजा हनसे नासियन फिल ऐमान, मुस्लिम बाबु तजाबुज़िल्लाहे अन हदीसिन नफ्से वल ख्वातिरे बिल कल्बे इजालम तस्तक़िर्)

[1] وريد शहेरग, अथवा प्राण नाडीलाई भनिन्छ जसलाई काट्नाले मृत्यु हुनजान्छ। यो रग (नाडी) घाँटीका एक किनारबाट मानिसका काँधसम्म हुन्छ। यस निकटताबाट तात्पर्य ज्ञानका आधारमा निकटता हो। अर्थात् ज्ञानले हामी मानिसका यति समीप छौं कि त्यसका मनको कुराहरु पनि जान्दछौं । इमाम इब्ने कसीर भन्नुहुन्छ कि 'हामी' सित अभिप्राय फरिश्ताहरु हुन्, अर्थात हाम्रा फरिश्ताहरु मानिसको प्राण नाडीभन्दा पनि निकट छन्, किनकि मानिसका दायाँ-बायाँ दुई फरिश्ता प्रत्येक क्षण उपस्थित रहन्छन्, उनी मानिसको प्रत्येक कुरो तथा कामलाई लेख्दछन् ﴿يَتَلَقَّى الْمُتَلَقِّيَانِ﴾ को अर्थ हो ग्रहण गर्दछन् तथा लेख्दछन् । इमाम शौकानीले यसको भावार्थ लिएका छन् कि हामी मानिसका सबै स्थितिहरुलाई जान्दछौं बिना यसका कि हामी ती फरिश्ताहरुका मुहताज हौं जसलाई हामीले मानिसका कथन तथा कर्महरु लेख्नलाई नियुक्त गरेका छौं । दुई फरिश्ताहरुसित अभिप्राय केही विद्वानहरुका विचारमा एउटा सत्कर्म लेख्न तथा दोस्रो कुकर्म लेख्नका लागि छ। केही अन्य विद्वानहरुका निकट रात-दिनका फरिश्ताहरु अभिप्राय हो । रातका दुई फरिश्ताहरु अलग तथा दिनका दुई फरिश्ताहरु अलग । (फ़तहुल क़दीर)

[2] رقيب (रक़ीब) फरिश्ताहरु निरीक्षक तथा मानिसका कथन तथा कर्मको प्रतिक्षा गर्नेवाला । عتيد (अतीद) उपस्थित तथा तयार ।

[3] यसको दोस्रो अर्थ 'मृत्युको कठिनाई सत्यका साथ आउनेछ' हो अर्थात् मृत्युको समय सत्य प्रकट तथा ती वचनहरुको सत्य त स्पष्ट हुनजान्छ जो केयामत (प्रलय) तथा स्वर्ग एवं नर्कका विषयमा अम्बिया अलैहिमुस्सलाम गर्दै आइराखेका छन् ।

[4] تحيد तिमी यस मृत्युबाट भड्कन्थे तथा भाग्दथे ।

وَنُفِخَ فِي الصُّورِ ذَٰلِكَ يَوْمُ الْوَعِيدِ ﴿٢٠﴾

(२०) तथा नरसिंघा फुकिनेछ । यातनाका वाचाको दिन यही हो ।

وَجَاءَتْ كُلُّ نَفْسٍ مَّعَهَا سَائِقٌ وَشَهِيدٌ ﴿٢١﴾

(२१) तथा प्रत्येक व्यक्ति यसप्रकार आउनेछ कि त्यसका साथ एउटा हाँकेर ल्याउनेवाला हुनेछ तथा एउटा साक्ष्य दिनेवाला ।[1]

لَّقَدْ كُنتَ فِي غَفْلَةٍ مِّنْ هَٰذَا فَكَشَفْنَا عَنكَ غِطَاءَكَ فَبَصَرُكَ الْيَوْمَ حَدِيدٌ ﴿٢٢﴾

(२२) वस्तुत: तिमी यसबाट असावधान थियौ, परन्तु हामीले तिम्रा सामुबाट पर्दा हटाइदियौं त आज तिम्रो दृष्टि अति तीब्र छ ।

وَقَالَ قَرِينُهُ هَٰذَا مَا لَدَيَّ عَتِيدٌ ﴿٢٣﴾

(२३) त्यसका साथ रहनेहरु (फरिश्ताहरु) ले भन्नेछन् यो उपस्थिति हो, ज़ो कि मेरो पासमा थियो ।[2]

أَلْقِيَا فِي جَهَنَّمَ كُلَّ كَفَّارٍ عَنِيدٍ ﴿٢٤﴾

(२४) दुबै हालिदेउ नरक़मा प्रत्येक काफ़िर उद्दण्डलाई ।

مَّنَّاعٍ لِّلْخَيْرِ مُعْتَدٍ مُّرِيبٍ ﴿٢٥﴾

(२५) जो पुण्य कार्यबाट रोक्नेवाला, सीमा उल्लंघन गर्नेवाला तथा सन्देह गर्नेवाला थियो ।

الَّذِي جَعَلَ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ فَأَلْقِيَاهُ فِي الْعَذَابِ الشَّدِيدِ ﴿٢٦﴾

(२६) जसले अल्लाहका साथ अन्य देवता बनाएका थिए, त त्यसलाई कठोर यातनामा हालिदेउ ।[3]

قَالَ قَرِينُهُ رَبَّنَا مَا أَطْغَيْتُهُ وَلَٰكِن كَانَ فِي ضَلَالٍ بَعِيدٍ ﴿٢٧﴾

(२७) त्यसको साथी (शैतान) ले भन्नेछ कि हे हाम्रा प्रभु ! मैले यसलाई मार्गबाट विचलित गरेको थिइन, बरु यो स्वयं नै टाढाका विचलनमा थियो ।[4]



[1] سَائِقٌ (हाँक्नेवाला) तथा शहीद (साक्षी) का सम्बन्धमा मतभेद छ । इमाम तबरीका विचारले यी दुई फरिश्ताहरु हुन्, एउटा मानिसलाई महशर (एकत्रित गरिने स्थान) सम्म हाँक्नेवाला तथा दोस्रो साक्ष्य दिनेवाला ।

[2] अर्थात फरिश्ताले मानिसको पूरा रेकर्ड अगाडी राखिदिनेछ कि यो तिम्रो कर्मपत्र हो जो कि मेरो पासमा थियो ।

[3] अल्लाह तआलाले कर्मपत्रका अनुसार न्याय तथा निर्णय गर्नेछ । أَلْقِيَا (अल्केया) सित الشَّدِيد (अश्शदीद) सम्म अल्लाहको कथन हो ।

[4] यसकारण उसले तुरुन्त मेरो कुरा मानिहाल्यो त यो तिम्रो विशुद्ध भक्त भएको भए त मेरा बहकाउमा आउँदैनथ्यो ।

(२८) अल्लाह (तआ़ला) ले भन्नेछ कि मेरा समक्ष झगडाहरुको कुरा नगर। मैले त पूर्वमा नै तिमीतिर यातनाको वाचा पठाइसकेको थिएँ।[1]

قَالَ لَا تَخْتَصِمُوْا لَدَيَّ وَقَدْ قَدَّمْتُ اِلَيْكُمْ بِالْوَعِيْدِ ﴿٢٨﴾

(२९) मेरो पासमा मेरा निकट कुरा बदलिन्न[2] तथा न म आफ्ना भक्तहरुमाथि अलिकति पनि अत्याचार गर्दछु।[3]

مَا يُبَدَّلُ الْقَوْلُ لَدَيَّ وَمَا اَنَا بِظَلَّامٍ لِّلْعَبِيْدِ ﴿٢٩﴾

(३०) जुन दिन हामीले नरकसित सोध्नेछौं कि के तिमी टन्न भरियौ ? त्यसले उत्तर दिनेछ कि के केही अझ अधिक पनि छ ?[4]

يَوْمَ نَقُوْلُ لِجَهَنَّمَ هَلِ امْتَلَاْتِ وَتَقُوْلُ هَلْ مِنْ مَّزِيْدٍ ﴿٣٠﴾

यहाँ قَرِيْنٌ (साथी) सित तात्पर्य शैतान हो।

[1]अर्थात् अल्लाह काफ़िरहरु तथा उनका साथी शैतानहरुसित भन्नेछ कि यहाँ हिसाबका स्थान तथा न्यायलयमा लड्नु-झगड्नुको आवश्यकता छैन, न यसको कुनै लाभ नै छ। मैले त पहिला नै ईशदूतहरु तथा धर्मशास्त्रहरुद्वारा यी धम्कीहरुसित तिमीलाई सूचित गरिदिएको थिएँ।

[2]अर्थात् जुन वचन दिए थिएँ उनका विपरीत हुने छैनन्, बरु प्रत्येक दशामा पूरा हुनेछन् तथा यसै नियमानुसार तिम्रो निर्णय मेरो तर्फबाट भएको छ, जसमा कुनै परिवर्तन हुनसक्दैन।

[3]कि बिना अपराधका जो उनीहरुले गरेका छन् तथा निर्दोष जो उनीहरुले गरेका हुन्छन् उनलाई दण्ड दिदेऊ ? अथवा वाक्यशैली (मुहाबरा) का रुपमा बोलिएको छ। जस्तै साधारणतः भनिन्छ कि अमुक व्यक्ति आफ्ना दासहरुमाथि अत्याचार गर्दछ, अमुक बडो क्रुर छ, यसको उद्देश्य अतिशयोक्ति होइन, अर्थात तात्पर्य हो कि म आफ्ना भक्तहरुमाथि अलिकति पनि अत्याचारी छैन।

[4]अल्लाहले भन्नुभएको छ : ﴿لَأَمْلَأَنَّ جَهَنَّمَ مِنَ الْجِنَّةِ وَالنَّاسِ أَجْمَعِينَ﴾

"म नरकलाई मानिस तथा जिन्नहरुबाट टन्न भरिदिनेछु।" (अलिफ.लाम.मीम अस्सजदा-१३)

यो वचन जब पूरा भइहाल्नेछ तथा अल्लाहले काफ़िर, जिन्न तथा मानिसलाई नरकमा हालिदिनेछ, त नरकसित सोधिनेछ कि तिमी टन्न भरिएका छौ कि छैनौं ? त्यसले उत्तर दिनेछ कि के केही अरु पनि छ ? अर्थात् यद्यपि म टन्न भरिसकिएको छु परन्तु हे अल्लाह तिम्रा विरोधीहरुका लागि ममा अझ पनि ठाउँ छ।

(३१) तथा स्वर्ग सदाचारीहरुका लागि पूर्ण निकट गरिदिनेछ, अलिकति पनि टाढा हुनेछैन ।[1]

وَأُزْلِفَتِ الْجَنَّةُ لِلْمُتَّقِينَ غَيْرَ بَعِيدٍ ﴿٣١﴾

(३२) यो हो जसको वादा (वाचा) तिमीसित गरिन्थ्यो प्रत्येक त्यस व्यक्तिका लागि जो ध्यानमँग्न तथा आबद्ध होस् ।[2]

هَٰذَا مَا تُوعَدُونَ لِكُلِّ أَوَّابٍ حَفِيظٍ ﴿٣٢﴾

(३३) जो दयालुको गुप्त रुपसित भय राख्दछ तथा आकर्षित हुने हृदय ल्याएको होस् ।[3]

مَنْ خَشِيَ الرَّحْمَٰنَ بِالْغَيْبِ وَجَاءَ بِقَلْبٍ مُنِيبٍ ﴿٣٣﴾

(३४) तिमी यस स्वर्गका शान्तिका साथ प्रवेश गरिहाल । यो सधैं रहनुको दिन हो ।

ادْخُلُوهَا بِسَلَامٍ ۖ ذَٰلِكَ يَوْمُ الْخُلُودِ ﴿٣٤﴾

---

ठाउँ छ । नरक़सित अल्लाहको यो कुरो तथा नरक़बाट उत्तर दिनु अल्लाहका सामर्थ्यवान कदापि सम्भव छैन । हदीसमा पनि वर्णित छ कि आगोमा मानिसहरु हालिनेछन् तथा नरक़ले भन्नेछ هَلْ مِنْ مَزِيدٍ कि केही अरु पनि छ ? यहाँसम्मकि अल्लाहले नरक़मा आफ्नो खुट्टा राखिदिनेछ जसबाट नरक़ पुकारिहाल्नेछ,'कत, कत' अर्थात भयो, भयो । (सहीह बुखारी, तफ़सीर सूरः काफ़ । जन्नत (स्वर्ग) का सम्बन्धमा वर्णित छ कि स्वर्गमा अझै ठाउँ रहनेछ त अल्लाह त्यसका लागि नयाँ सृष्टि पैदा गर्नेछ जो त्यहाँ आबाद हुनेछन् । (सहीह मुस्लिम, किताबुल जन्ना, बाबुन्नारे यद्खुलुहा अल-जब्बारून वल जन्नते यदखुलुहा अज़्जुअफाऊ)

[1]तथा केही विद्वानहरुले भनेका छन् कि क़्यामतका दिन जब स्वर्ग समीप गरिदिइनेछ टाढा छैन, किनकि त्यसलाई अवश्य व्याप्त हुनुछ तथा وَكُلُّ مَا هُوَ آتٍ فَهُوَ قَرِيبٌ. जो पनि आगामी वस्तु छ त्यो समीप छ, टाढा छैन । (इब्ने क़सीर)

[2]अर्थात् जब ईमानवाला स्वर्ग तथा त्यसको सुख-सुविधाहरुको समीपबाट दर्शन गर्नेछन् त भनिनेछ कि यही त्यो स्वर्ग हो जसको वादा प्रत्येक अल्लाहमा ध्यानमँग्न तथा त्यसको आज्ञापालन गर्नेवालासित गरिएको थियो । أَوَّابٌ (अव्वाब) अल्लाहमा ध्यान गर्ने अर्थात् अधिक तौबा (क्षमा-याचना) गर्ने तथा अल्लाहको पवित्रता (तस्वीह) तथा स्मरण गर्ने, एकान्तमा आफ्ना पापहरुलाई याद गर्ने व्यक्ति । حَفِيظٌ (हफ़ीज) आफ्ना पापहरुलाई याद गरेर उनीबाट क्षमा माँग्ने, अथवा अल्लाहका अधिकार तथा त्यसका उपकारहरुलाई याद राख्ने, अथवा अल्लाहको आज्ञा तथा निषेधलाई याद राख्ने व्यक्ति (फ़तहुल क़दीर)

[3] مُنِيبٌ (मुनीब) अल्लाहतिर ध्यान गर्ने तथा त्यसको आज्ञाकारी हृदय आफ्ना अथवा शिर्क तथा पापका दोषहरुबाट पवित्र हृदय ।

لَهُم مَّا يَشَآءُونَ فِيهَا وَلَدَيْنَا مَزِيدٌ ﴿٣٥﴾

(३५) यिनीहरु त्यहाँ जे-जति चाहन्छन्, उनीहरुलाई प्राप्त हुनेछ (बरु) हाम्रा पासमा अझ पनि अधिक छ ।[1]

وَكَمْ أَهْلَكْنَا قَبْلَهُم مِّن قَرْنٍ هُمْ أَشَدُّ مِنْهُم بَطْشًا فَنَقَّبُوا فِي الْبِلَادِ هَلْ مِن مَّحِيصٍ ﴿٣٦﴾

(३६) तथा उनीभन्दा पूर्व पनि हामीले धेरै समुदायहरुलाई नष्ट गरिसकेका छौं, जो उनीभन्दा शक्तिमा अत्याधिक थिए, उनीहरु नगरहरुमा बरालिंदै रहे[2] कि कुनै भाग्नुको ठेगाना छ ?

إِنَّ فِي ذَٰلِكَ لَذِكْرَىٰ لِمَن كَانَ لَهُ قَلْبٌ أَوْ أَلْقَى السَّمْعَ وَهُوَ شَهِيدٌ ﴿٣٧﴾

(३७) यसमा प्रत्येक त्यस व्यक्तिका लागि सदुपदेश छ जसका हृदय[3] होस् अथवा कान थापोस्[4] तथा त्यो उपस्थित होस् ।[x]

وَلَقَدْ خَلَقْنَا السَّمَاوَاتِ وَالْأَرْضَ وَمَا بَيْنَهُمَا فِي سِتَّةِ أَيَّامٍ وَمَا مَسَّنَا مِن لُّغُوبٍ ﴿٣٨﴾

(३८) निःसन्देह हामीले आकाशहरु तथा धर्ती एवं दुबैका मध्येका जे-जति वस्तुहरु छन् सबैलाई (मात्र) ६ दिनमा पैदा गरिदियौं तथा हामीलाई थकाइले स्पर्शसम्म गरेन ।

فَاصْبِرْ عَلَىٰ مَا يَقُولُونَ وَسَبِّحْ بِحَمْدِ رَبِّكَ قَبْلَ طُلُوعِ الشَّمْسِ

(३९) अतः तपाईं ती कुराहरुमा धैर्यधारण गर्नुस् तथा आफ्ना प्रभुको पवित्रतागान प्रशंसाका साथ सूर्य उदाउनुभन्दा पहिला पनि तथा



[1]यसबाट अभिप्राय अल्लाहको दर्शन हो जो स्वर्गवासीहरुलाई प्राप्त हुनेछ, जस्तो कि ﴿لِّلَّذِينَ أَحْسَنُوا الْحُسْنَىٰ وَزِيَادَةٌ﴾ (यूनुस-२६) को तफ़सीर (व्याख्या) मा गुज्रयो ।

[2] ﴿فَنَقَّبُوا فِي الْبِلَادِ﴾ (नगरहरुमा हिंडे-डुले) को एउटा अरु भावार्थ यो वर्णन गरिएको छ ती मक्कावासीहरुसित अधिक व्यापार तथा व्यवसायका लागि विभिन्न नगरहरुमा डुल्थे, परन्तु हाम्रो प्रकोप आयो त उनले कहीं शरण तथा भाग्नुको मार्ग पाएनन् ।

[3]अर्थात् जागृत हृदय जो सोच-विचार गरी वास्तविकताहरुलाई बोध गरून् ।

[4]अर्थात् मन तथा चेतनाले उपस्थित होस् यसकारण कि जो कुरा नै बुझ्दैन उनी उपस्थित हुँदाहुँदै पनि यस्ता छन् जस्तो छैनन् ।

وَقَبْلَ الْغُرُوبِ ﴿٣٩﴾

अस्ताउनु[1] भन्दा पहिला पनि गर्नुस् ।

وَمِنَ الَّيْلِ فَسَبِّحْهُ وَأَدْبَارَ السُّجُودِ ﴿٤٠﴾

(४०) तथा रातका कुनै समयमाथि[2] पनि महिमागान गर्नुस् तथा नमाज़का पश्चात पनि ।[3]

وَاسْتَمِعْ يَوْمَ يُنَادِ الْمُنَادِ مِن مَّكَانٍ قَرِيبٍ ﴿٤١﴾

(४१) तथा सुनिराख्नुस्[4] जुन दिन एउटा पुकार्ने[5] ले नजीककै स्थानबाट पुकार्नेछ ।[6]

[1]अर्थात् प्रातः सन्ध्या समय अल्लाहको तस्वीह (पवित्रगान) गर अथवा अस्र तथा फज्रको नमाज़ पढ्नुमाथि जोड दिएको छ ।

[2] مِن केहीको अर्थ दिनका लागि छ । अर्थात रातका केही भागमा पनि अल्लाहको तस्वीह (महिमागान) गर्नुस् । अथवा रातको नमाज़ (तहज्जुद) पढ्नुस्, जस्तै अर्को स्थानमा भन्यो : ﴿وَمِنَ الَّيْلِ فَتَهَجَّدْ بِهِۦ نَافِلَةً لَّكَ﴾

"रात यदि उठेर तहज़्जुदको नमाज़ पढ्नुस् तपाईंका लागि अधिक पुण्यको कारण छ ।"(बनी इस्राईल-७९)

केही ज्ञाताहरु भन्छन् कि मेराजभन्दा पहिला मुसलमानहरुमाथि केवल फज्र तथा अस्रको नमाज़ तथा नबी सल्लल्लाहु अलैहि व सल्लममाथि तहज़्जुदको नमाज़ पनि फर्ज (अनिवार्य) थियो । मेराजका अवसरमा पाँच नमाज़हरु अनिवार्य गरिए । (इब्ने कसीर)

[3]अर्थात् अल्लाहको तस्वीह गर्नुस् । केही धर्मविशेषज्ञले यसबाट ती तस्वीहहरु अभिप्राय लिएका छन्, जुन पढ्नमाथि फर्ज़ (अनिवार्य) नमाज़हरुका पश्चात नबी सल्लल्लाहु अलैहि व सल्लमले जोड दिनुभएको छ जस्तै سُبْحَانَ الله (सुब्हानल्लाह) ३३ पटक, الحمد لله (अल्हम्दो लिल्लाहे) ३३ पटक, الله أكبر (अल्लाहो अकबर) ३४ पटक आदि । (अल- बुख़ारी, किताबुल अज़ान, बाबुज़ ज़िके बादस सलाति, मुस्लिम बाबु इस्तिहबाबिज्जिके, बादस सलाति व बयानु सिफ़तिही) केही ज्ञाताहरुले भनेका छन् कि أدبار السجود सित अभिप्राय मग़रिबको नमाज़का पश्चातका दुई रकातहरु हुन् । केही अन्यले भनेका छन् कि उपरोक्त तस्वीहहरु आयत उतर्नुका धेरै समय पश्चात भनिएका थिए ।

[4]अर्थात् केयामतका जो समाचार (अहवाल) प्रकाशना (वह्य) का माध्यमले वर्णन गरिंदैन, यिनलाई ध्यानले सुन्नुस् ।

[5]यो पुकार्नेवाला इस्राफ़ील फरिश्ता हुनेछ अथवा जिब्रील तथा यो त्यो पुकार हुनेछ जसबाट मानिस मैदाने महशरमा एकत्र हुनेछन्, अर्थात् दोस्रो फूँक ।

[6]यसबाट केही विज्ञहरुले बैतुल मोकद्दसका समीपको सखरः (चट्टान) तात्पर्य लिएका छन् । भन्दछन् कि यो आकाशबाट निकट्तम स्थान हो । केहीका निकट यसका अभिप्राय यो हो कि प्रत्येक व्यक्तिले यो आवाज यसप्रकार सुन्नेछ जस्तै

(४२) जुन दिन त्यस कडा आवाजलाई सविश्वास सुन्नेछन्, यही निस्कनुको दिन हुनेछ ।[1]

يَوْمَ يَسْمَعُونَ الصَّيْحَةَ بِالْحَقِّ ۚ ذَٰلِكَ يَوْمُ الْخُرُوجِ ﴿٤٢﴾

(४३) हामीले नै जीवित गर्दछौं तथा मार्दछौं[2] तथा हामीतिर नै फर्किआउनु[3] छ ।

إِنَّا نَحْنُ نُحْيِي وَنُمِيتُ وَإِلَيْنَا الْمَصِيرُ ﴿٤٣﴾

(४४) जुन दिन धर्ती फाट्छ तथा यिनी दुगर्दै[4] (निस्किहाल्नेछन्), यो एकत्रित गर्नु हामीलाई निकै नै सरल छ ।

يَوْمَ تَشَقَّقُ الْأَرْضُ عَنْهُمْ سِرَاعًا ۚ ذَٰلِكَ حَشْرٌ عَلَيْنَا يَسِيرٌ ﴿٤٤﴾

(४५) हामी राम्ररी जान्दछौं जे-जति यिनीहरु भनिराखेका छन् तथा तपाईं उनीहरुलाई बलपूर्वक[5] मनाउन लगाउने हुनुहुन्न, बस मात्र तपाईं उनीहरुलाई कुर्आनद्वारा सम्झाउँदै रहनुस् जो मेरो धम्कीबाट तर्सन्छन् ।[6]

نَحْنُ أَعْلَمُ بِمَا يَقُولُونَ ۖ وَمَا أَنتَ عَلَيْهِم بِجَبَّارٍ ۖ فَذَكِّرْ بِالْقُرْآنِ مَن يَخَافُ وَعِيدِ ﴿٤٥﴾

त्यसका समीपबाट नै आवाज आइराखेको छ । (फ़तहुल क़दीर) तथा यही सही लाग्दछ ।

[1]यो चित्कार अर्थात् यो केयामतको फूँक निश्चय हुनेछ, जसमा त्यो जगतमा शंका गर्दथे, तथा यही दिन कब्रहरुबाट निस्कने दिन हुनेछ ।

[2]अर्थात संसारमा मृत्युको काखमा हालिदिनु तथा परलोकमा जीवन दान हाम्रै काम हो । यसमा कोही हाम्रो साझी छैन ।

[3]त्यहाँ हामी प्रत्येक मनुष्यलाई त्यसका कर्मानुसार फल दिनेछौं ।

[4]अर्थात् त्यस पुकार्नेवालातिर दौड्नेछन् जसले पुकारेको हुनेछ । (फ़तहुल क़दीर) नबी सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो : जब धर्ती फाट्नेछ त सबभन्दा पहिला जीवित भएर म नै निस्कनेछु, «أَنَا أَوَّلُ مَنْ تَنْشَقُّ عَنْهُ الأَرْضُ» (सहीह मुस्लिम, किताबुल फज़ायेल, बाबु तफ़्ज़ीले नबियेना सल्लल्लाहु अलैहि वसल्लम अला जमीइल ख़्लायेक)

[5]अर्थात् तपाईंमाथि यसको भार छैन कि उनलाई ईमान स्वीकार गर्नुमा बाध्य गरिदिनुस्, वरु तपाईंको कर्तव्य केवल उपदेश दिनु तथा आमन्त्रण हो, तपाईं यही काम गर्दैराख्नुस् ।

[6]अर्थात् तपाईंको दावत तथा सदुपदेशबाट त्यसैले शिक्षा प्राप्त गर्नेछ जो अल्लाह तथा त्यसका धम्कीहरुसित तर्सन्थ्यो तथा त्यसका वचनमा विश्वास राखेको हुनेछ । यसैकारण आदरणीय कतादा यो दुआ गर्ने गर्दथे :

## सूरतुज़ ज़ारियात-५१

سُورَةُ الذَّارِيَاتِ

सूरः ज़ारियात मक्कामा अवतरित भएको तथा यसमा साठी आयतहरु एवं तीन रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु तथा अत्यन्त कृपालु छ ।

وَالذَّارِيَاتِ ذَرْوًا ①

(१) सौगन्ध छ उडाएर छर्नेवालीहरुको,[1]

فَالْحَامِلَاتِ وِقْرًا ②

(२) अनि बोध उठाउनेवालीहरुको,[2]

فَالْجَارِيَاتِ يُسْرًا ③

(३) अनि सुस्त गतिले चल्नेवालीहरु,[3]

فَالْمُقَسِّمَاتِ أَمْرًا ④

(४) अनि कामको विभाजन गर्नेवालीहरु ।[4]

«اللَّهُمَّ اجْعَلْنَا مِمَّنْ يَخَافُ وَعِيدَكَ، وَيَرْجُو مَوْعُودَكَ، يَابَارُّ ! يَارَحِيمُ !»

"हे अल्लाह हामीलाई उनीहरुमध्ये गरिदियौं जो तिम्रा धम्कीहरुबाट तर्सन्छन् तथा तिम्रा वचनहरुबाट आशा राख्दछन्, हे कल्याण गर्नेवाला, हे दया गर्नेवाला ।" (इब्ने कसीर)

[1]यसबाट अभिप्राय वायु हो जसले धूलो उडाएर यताउता पारिदिन्छ ।

[2]وِقْرًا (वक्र) अर्थात् प्रत्येक त्यो भार जसलाई कुनै प्राणी लिएर हिंड्छ । अभिप्राय ती वायुहरु हुन्, जो बादलहरुलाई बोकेका छन् अथवा ती बादल जो जलको बोझ बोकेका छन्, जस्तै पशु गर्भका बोझ उठाउँछन् ।

[3] جاريات (जारीयात) पानीमा चल्नेवाली नौकाहरु, يُسْرًا (युस्रन) सरलताले ।

[4]مقسمات यसबाट अभिप्राय ती फरिश्ताहरु हुन् जो कार्यहरुलाई विभाजित गरिदिन्छन्, कोही दयाको फरिश्ता छ त कोही प्रकोपको, कोही जलको, त कोही अकालको, कोही वायुको छ, त कोही मृत्युको एवं घटनाहरुको । केही विद्वानहरुले यी सबैबाट अभिप्राय वायुहरु लिएका छन् तथा यी सबैलाई वायुको विशेषण बनाएका छन् । जस्तै अनुवादक विशेषज्ञले पनि यसैका अनुसार अनुवाद गरेको छ । परन्तु हामीले इमाम इब्ने क़सीर तथा इमाम शौक़ानीको व्याख्या अनुसार गरेका छौं । शपथको आशय, जसको शपथ लिइन्छ, त्यसको सत्यताको वर्णन गर्नुपर्ने हुन्छ अथवा कहिलेकाहीं केवल जोड दिन अभिप्राय हुन्छ तथा कहिले जसको शपथ ग्रहण गरिन्छ, त्यसलाई प्रमाण स्वरुप गर्नुपर्ने हुन्छ, यहाँ शपथको यही

إِنَّمَا تُوعَدُونَ لَصَادِقٌ ۝٥

(५) विश्वास गर कि तिमीसित जुन वचन दिइन्छन् (सबै) सत्य छन् ।

وَإِنَّ الدِّينَ لَوَاقِعٌ ۝٦

(६) तथा निःसन्देह न्याय हुनेवाला छ ।

وَالسَّمَاءِ ذَاتِ الْحُبُكِ ۝٧

(७) सौगन्ध छ मार्गहरु भएको आकाशको ।[1]

إِنَّكُمْ لَفِي قَوْلٍ مُخْتَلِفٍ ۝٨

(८) निश्चित रुपमा तिमी विभिन्न कुराहरुमा परेका छौ ।[2]

يُؤْفَكُ عَنْهُ مَنْ أُفِكَ ۝٩

(९) त्यसबाट त्यही विमुख (रोक्नु) गरिन्छ[3] जो रोकिदिइएका हुन्छ ।

قُتِلَ الْخَرَّاصُونَ ۝١٠

(१०) निर्मूल कुराहरु गर्ने नाश गरिए ।

الَّذِينَ هُمْ فِي غَمْرَةٍ سَاهُونَ ۝١١

(११) जो अचेत छन् तथा बिर्सेका छन् ।

तेस्रो प्रकार हो, अगाडी शपथको उत्तर यो वर्णन गरिएको छ कि तिमीलाई जुन वचन दिइन्छन् ती निश्चय सच्चा छन् तथा क़ेयामत (प्रलय) भएर नै रहनेछ जसमा न्याय गरिनेछ । यो हावाहरु चल्नु बादलहरुले जल बोक्नु, सागरहरुमा नौकाहरु (डुङ्गाहरु) चल्नु तथा फरिश्ताहरुद्वारा विभिन्न कार्य गर्नु केयामत हुने कुराको प्रमाण हो, किनकि जो अल्लाह यी सबै कुरा गर्दछ, जो प्रत्यक्षरुपले अत्यन्त कठिन तथा सामान्य साधनहरुका विपरीत छ । त्यसैले क़्यामतका दिन सबै मानवलाई पुनः जीवन पनि प्रदान गर्न सक्दछ ।

[1]दोस्रो अनुवाद सुन्दर तथा शोभामान गरिएको छ । चाँद, सूर्य, नक्षत्र एवं प्रकाशमान तारा त्यसका ऊँचाई तथा विस्तार, यो सबै आकाशको शोभा तथा सौन्दर्यका कारण हुन् ।

[2]अर्थात् हे मक्कावासीहरु ! तिमी कुनै एउटा कुरामाथि सहमत छैनौ । हाम्रा पैग़म्बरलाई तिमीमध्ये कोही जादूगर भन्दछ, कोही कवि, कोही भविष्यवेत्ता तथा कोही झूठा भन्दछन् । यसैप्रकार कोही क़ेयामतलाई मान्दैन तथा कोही सन्देह गर्दछ । यसका अतिरिक्त एकातिर अल्लाहलाई विधाता तथा जीविका दाता हुने कुरोलाई स्वीकार गर्दछौ तथा अर्कोतिर अरुहरुलाई पनि पूज्य बनाएका छौ ।

[3]अर्थात् नबी सल्लल्लाहु अलैहि व सल्लममाथि ईमान स्वीकार गर्नुबाट अथवा सत्यबाट, अथवा पुनर्जीवन तथा तौहीद (एकेश्वरवाद) बाट, अथवा अभिप्राय हो कि उपरोक्त मतभेदबाट त्यो व्यक्ति विमुख गरिदियो जसलाई अल्लाहले आफ्नो सन्मतिले विमुख गरिदियो । प्रथम भावमा निन्दा छ, दोस्रोमा प्रशंसा

يَسْـَٔلُونَ أَيَّانَ يَوْمُ ٱلدِّينِ ﴿١٢﴾

(१२) सोध्छन् कि बदलाको दिन कहिले हुनेछ ?

يَوْمَ هُمْ عَلَى ٱلنَّارِ يُفْتَنُونَ ﴿١٣﴾

(१३) (हो) यो त्यो दिन हो कि यिनी आगोमा पोलिनेछन् ।[1]

ذُوقُوا۟ فِتْنَتَكُمْ هَٰذَا ٱلَّذِى كُنتُم بِهِۦ تَسْتَعْجِلُونَ ﴿١٤﴾

(१४) (भनिनेछ) आफ्ना उपद्रवको स्वाद चाख,[2] यही हो जसको तिमीले शीघ्रता मचाइराखेका थियौ ।

إِنَّ ٱلْمُتَّقِينَ فِى جَنَّٰتٍ وَعُيُونٍ ﴿١٥﴾

(१५) निःसन्देह अल्लाहसित भय राख्ने स्वर्गहरु एवं (शीतल) जलस्रोतहरुमा हुनेछन् ।

ءَاخِذِينَ مَآ ءَاتَىٰهُمْ رَبُّهُمْ ۚ إِنَّهُمْ كَانُوا۟ قَبْلَ ذَٰلِكَ مُحْسِنِينَ ﴿١٦﴾

(१६) उनका प्रभुले जे-जति उनलाई प्रदान गरेको छ, त्यसलाई लिइराखेका हुनेछन्, उनीहरु त त्यसभन्दा पूर्व नै सदाचारी थिए ।

كَانُوا۟ قَلِيلًا مِّنَ ٱلَّيْلِ مَا يَهْجَعُونَ ﴿١٧﴾

(१७) उनीहरु रात्रिमा निकै कम सुत्ने गर्दथे ।[3]

وَبِٱلْأَسْحَارِ هُمْ يَسْتَغْفِرُونَ ﴿١٨﴾

(१८) तथा उनी रात्रिका अन्तिम अंश (बिहान पख) मा क्षमा-याचना गर्ने गर्दथे ।[4]

---

[1] يُفْتَنُونَ को अर्थ हो يُحَرَّقُونَ و يُعَذَّبُونَ जुनप्रकार सुनलाई अग्निमा हालेर जाँच परख गरिन्छ, यसैप्रकार यिनी आगोमा हालिनेछन् ।

[2] فِتْنَة (फ़ितनः) को अर्थ हो यातना तथा आगोमा पोलिनु ।

[3] هُجُوع (हुजूअ) को अर्थ हो रातमा सुत्नु । مَا يَهْجَعُون मा फेरि जोडका ما लागि छ । उनीहरु रातिमा कम सुत्थे । अर्थ हो पूरा राति सुतेर अल्छीपना तथा आनन्दमा समय बिताउँदैनथे बरु रातिको केही भाग अल्लाहको स्मरणमा तथा त्यसका सदनमा विन्ति यातना गरेर गुजार्दथे जस्तो कि हदीसहरुमा पनि क़्यामुल्लैल (रातिको नमाज़) मा जोड दिएको छ, जस्तो कि एक हदीसमा भन्नुभयो, "मानिसहरु ! मानिसहरुलाई खाना खुवाउ, नाताहरु जोड, सलाम फैलाउ तथा रातमा जागेर नमाज़ पढ जबकि मानिस सुतेका हुन्छन्, तिमी शान्तिका साथ स्वर्गमा प्रवेश गर्नेछौ । (मुसनद अहमद ५/४५१)

[4] बिहानको समय प्रार्थनाको स्वीकृतिको अति उत्तम समय हो । हदीसमा वर्णित छ कि जब रातको तिहाई भाग शेष रहन्छ त अल्लाह संसारका आकाशमा ओर्लन्छ तथा आवाज दिन्छ कि कोही प्रायश्चित गर्नेवाला छ कि म उसको प्रायश्चित स्वीकार गरून्, कोही क्षमा माँग्नेवाला छ कि म उसलाई क्षमा गरुँ, कोही भिखारी छ कि म त्यसको माँग पूरा गरिदिऊ, यहाँसम्मकि फज्र (प्रभात) उदय हुनजान्छ । (सहीह मुस्लिम किताब

| | |
|---|---|
| (१९) तथा उनका मालमा माँग्नेवालाहरुको तथा प्रश्न गर्नबाट बच्नेहरुको अधिकार थियो ।[1] | وَفِيٓ أَمۡوَٰلِهِمۡ حَقّٞ لِّلسَّآئِلِ وَٱلۡمَحۡرُومِ ١٩ |
| (२०) तथा विश्वास गर्नेहरुका लागि त धर्तीमा धेरै निशानीहरु छन् । | وَفِي ٱلۡأَرۡضِ ءَايَٰتٞ لِّلۡمُوقِنِينَ ٢٠ |
| (२१) तथा स्वयं तिम्रा अस्तित्वमा पनि, त के तिमी देख्दैनौ । | وَفِيٓ أَنفُسِكُمۡۚ أَفَلَا تُبۡصِرُونَ ٢١ |
| (२२) तथा तिम्रो जीविका तथा जे तिमीलाई वचन दिइन्छ सबै आकाशमा छ ।[2] | وَفِي ٱلسَّمَآءِ رِزۡقُكُمۡ وَمَا تُوعَدُونَ ٢٢ |
| (२३) तसर्थ आकाश तथा धर्तीको प्रभुको सौगन्ध ![3] यो पूर्णत: सत्य हो । यस्तो नै जस्तो कि तिमी कुरा गर्दछौ । | فَوَرَبِّ ٱلسَّمَآءِ وَٱلۡأَرۡضِ إِنَّهُۥ لَحَقّٞ مِّثۡلَ مَآ أَنَّكُمۡ تَنطِقُونَ ٢٣ |
| (२४) के तिमीलाई इब्राहीम (अलैहिस्सलाम) का सम्मानित अतिथिहरुको सूचना पनि पुगेको छ ?[4] | هَلۡ أَتَىٰكَ حَدِيثُ ضَيۡفِ إِبۡرَٰهِيمَ ٱلۡمُكۡرَمِينَ ٢٤ |
| (२५) उनीहरु जब उनीकहाँ यहाँ आए त सलाम गरे, (इब्राहीम) ले सलामको उत्तर दिए | إِذۡ دَخَلُواْ عَلَيۡهِ فَقَالُواْ سَلَٰمٗاۖ |

सलातिल मुसाफ़िरीन बाबुत तरगीबे फिद् दुआये वज़ ज़िके फी आख़िरिल लैले वल एजाबति फ़ीहि) ।

[1] محروم (महरूम) सित अभिप्राय त्यो हो जो आवश्यकता हुनुका पश्चात पनि माँगदैन, त त्यो योग्य हुँदाहुँदै पनि उसलाई मानिसहरुले दिदैनन् । अथवा त्यो व्यक्ति हो जसको सबैथोक आकाश तथा धर्तीको आपदाका कारण नाश हुनजाओस् ।

[2]अर्थात् वर्षा पनि आकाशबाट हुन्छ जसबाट तिम्रो जीविका पैदा हुन्छ तथा स्वर्ग-नरक तथा पुण्य एवं दण्ड पनि आकाशहरुबाट छ जसको वादा गरिन्छ ।

[3] إِنَّهُ मा सर्वनाम संकेत हो ती विषय तथा निशानीहरुतिर जो वर्णित भए ।

[4] هَلْ प्रश्नवाची शब्द हो, जसमा नबी सल्लल्लाहु अलैहि व सल्लमलाई चेतावनी (सूचना) छ कि यस कथाको ज्ञान तिमीलाई छैन, बरु हामी तिमीलाई प्रकाशनाद्वारा सूचित गरिराखेका छौं ।

قَالَ سَلٰمٌۚ قَوۡمٌ مُّنۡكَرُوۡنَ ﴿٢٥﴾

(तथा भने यी त) अपरिचित मानिस हुन् ।

فَرَاغَ اِلٰٓى اَهۡلِهٖ فَجَآءَ بِعِجۡلٍ سَمِيۡنٍ ﴿٢٦﴾

(२६) अनि (चूपचाप छिटो-छिटो) आफ्ना परिवारवालाहरुतिर गए तथा एउटा मोटो बाछोको (मासु) ल्यायो ।

فَقَرَّبَهٗۤ اِلَيۡهِمۡ قَالَ اَلَا تَاۡكُلُوۡنَ ﴿٢٧﴾

(२७) तथा उसलाई उनका पासमा राखे र भने तपाईं किन खानुहुन्न ?[२]

فَاَوۡجَسَ مِنۡهُمۡ خِيۡفَةً ؕ قَالُوۡا لَا تَخَفۡ ؕ وَبَشَّرُوۡهُ بِغُلٰمٍ عَلِيۡمٍ ﴿٢٨﴾

(२८) अनि मनैमनमा उनीबाट भयभीत भइहाले,[३] उनीहरुले भने कि तपाईं भयभीत नहुनुस्,[४] तथा उनीहरुले (आदरणीय) इब्राहीमलाई एउटा ज्ञानीपुत्र हुने कुराको सूचना दिए ।

فَاَقۡبَلَتِ امۡرَاَتُهٗ فِىۡ صَرَّةٍ فَصَكَّتۡ وَجۡهَهَا وَقَالَتۡ عَجُوۡزٌ عَقِيۡمٌ ﴿٢٩﴾

(२९) त उनकी पत्नीले आश्चर्यमा आएर[५] आफ्ना मुखमाथि हातले हानेर भनिन् कि म त बृद्धा हूँ, साथै बाँझो ।

قَالُوۡا كَذٰلِكِ ۙ قَالَ رَبُّكِ ؕ اِنَّهٗ هُوَ الۡحَكِيۡمُ الۡعَلِيۡمُ ﴿٣٠﴾

(३०) उनीहरुले भने कि हो तिम्रो प्रभुले यसैप्रकारले भनेको छ, निःसन्देह त्यो हिक्मत भएको एवं ज्ञाता छ ।[६]

---

[१]यो आफ्नो मनमा भने, उनलाई सम्बोधित गरेर भनेनन् ।

[२]अर्थात् खाना सामु राखिए पश्चात पनि त्यसतिर हात बढाएनन् त सोधे ।

[३]भयको संवेदन यसकारण गरे कि आदरणीय इब्राहीमले सोचे कि यी आउनेहरु कुनै राम्रो विचारले आएका होइनन् बरु नराम्रो इरादाले आएका हुन् ।

[४]आदरणीय इब्राहीम अलैहिस्सलामका अनुहारमा भयका चिन्हहरु देखेर फरिश्ताहरुले भने ।

[५] صَرَّةٌ (सर्रतिन) को दोस्रो अर्थ हो चित्कार तथा पुकार अर्थात् चिच्याउँदै भने ।

[६]अर्थात् जस्तो हामीले तिमीसित भनेका छौं, यो हामीले आफ्नो तर्फबाट भनेका होइनौं बरु तिम्रा प्रभुले यसैप्रकार भनेको छ, जसबाट हामीले तिमीलाई सूचित गरिराखेका छौं । यसकारण यसमा न आश्चर्यको आवश्यकता छ न सन्देहको किनकि जो अल्लाह तआ़ला चाहन्छ अवश्य भएर रहन्छ ।

قَالَ فَمَا خَطْبُكُمْ أَيُّهَا الْمُرْسَلُونَ ۝

(३१) (आदरणीय इब्राहीम अलैहिस्सलामले) भने कि अल्लाहद्वारा पठाइएका (फरिश्ताहरु !) तिम्रो के उद्देश्य हो ?[१]

قَالُوٓا إِنَّآ أُرْسِلْنَآ إِلَىٰ قَوْمٍ مُّجْرِمِينَ ۝

(३२) उनीहरुले उत्तरदिए कि हामी पापीहरुतिर पठाइएका हौं ।[२]

لِنُرْسِلَ عَلَيْهِمْ حِجَارَةً مِّن طِينٍ ۝

(३३) ताकि हामी उनीमाथि माटाका कंकरीहरु (स-साना टुक्रा) को वर्षा गरौं ।[३]

مُّسَوَّمَةً عِندَ رَبِّكَ لِلْمُسْرِفِينَ ۝

(३४) जो तिम्रा प्रभुका तर्फबाट नामांकित भइसकेको छ ती सीमा उल्लंघन गर्नेहरुका लागि ।[४]

فَأَخْرَجْنَا مَن كَانَ فِيهَا مِنَ الْمُؤْمِنِينَ ۝

(३५) त जति ईमान भएकाहरु त्यहाँ थिए, हामीले उनीहरुलाई निकालिदियौं ।[५]

فَمَا وَجَدْنَا فِيهَا غَيْرَ بَيْتٍ مِّنَ الْمُسْلِمِينَ ۝

(३६) तथा हामीले त्यहाँ मुसलमानहरुको मात्र एउटै घर पायौं ।[६]

---

[१] خَطْبٌ कथा, अभियान । अर्थात यस शुभ-सूचनाका अतिरिक्त तिम्रो अरु के कार्य एवं उद्देश्य छ जसका लागि तिमीलाई पठाइएको छ ।

[२] यसबाट अभिप्राय लूतको जाति हो जसको सबभन्दा ठूलो अपराध लिवातत (समलैंगिक मैथुन) थियो ।

[३] वर्षायौंको अभिप्राय हो कि यी कंकरीहरुद्वारा मारिहालौं । यी कंकरीहरु विशुद्ध पत्थरका थिए, न कि आकाशीय ओले (तुषार) थिए, बरु माटोबाट बनेका थिए ।

[४] مُسَوَّمَةً (मुसौव्वम:) नामांकित अथवा निशान लागिएको, उनको विशेष चिन्ह थियो अथवा ती प्रकोपका लागि विशेष थिए । केही धर्मविद भन्नुहुन्छ कि जुन कंकरीहरुवाट जसको मृत्यु हुनु थियो, त्यसमा त्यसको नाम लेखिएको हुन्थ्यो । مُسْرِفِينَ जो शिर्क तथा पथभ्रष्टतामा निकै अगाडी बढेका तथा दूराचार तथा पापमा सीमा उल्लंघन गर्नेहरु हुन् ।

[५] अर्थात प्रकोप आउनुभन्दा पूर्व हामीले त्यहाँबाट उनलाई निस्किहाल्नुको आदेश दिएका थियौं ताकि उनीहरु प्रकोपबाट सुरक्षित रहून् ।

[६] तथा यो अल्लाहका पैग़म्बर (सन्देष्टा आदरणीय लूत अलैहिस्सलामको घर थियो जसमा उनका दुई पुत्रीहरु तथा केही ईमान भएकाहरु थिए । भन्दछन् कि यिनी

(३७) तथा त्यहीं हामीले उनका लागि जो कष्टदायी यातनाको भय राख्दछन्, एउटा पूर्ण निशानी छाड्यौं ।[1]

وَتَرَكْنَا فِيهَا آيَةً لِّلَّذِينَ يَخَافُونَ الْعَذَابَ الْأَلِيمَ ﴿٣٧﴾

(३८) तथा मूसाको कथामा (पनि हाम्रो तर्फबाट चेतावनी छ) जबकि हामीले उसलाई प्रमाण दिएर पठायौं ।

وَفِي مُوسَىٰ إِذْ أَرْسَلْنَاهُ إِلَىٰ فِرْعَوْنَ بِسُلْطَانٍ مُّبِينٍ ﴿٣٨﴾

जम्मा तेह्र थिए । यिनमा आदरणीय लूतकि पत्नी सम्मिलित थिइनन्, अपितु त्यो आफ्नो जातिका साथ विनाशहरुमध्ये थिइ । (ऐसरूत्तफ़ासीर) इस्लामको अर्थ हो आज्ञापालन तथा समर्पण । अल्लाहका आदेशहरुका पालनामा शिर निहुराउने तथा झुकाउने मुस्लिम हो । यस आधारमा प्रत्येक मोमिन मुसलमान हुन् । यसैकारण उनका लागि मोमिन शब्द प्रयोग गरियो तथा पुनः उनैका लागि मुस्लिम शब्द भनिएको छ । यसबाट प्रमाणित गरिन्छ कि यिनका चरितार्थमा कुनै अन्तर छैन, जस्तो कि केही मोमिन तथा मुस्लिमको बीच गर्दछन् । कुर्आनले जो कहीं मोमिन तथा कहीं मुस्लिम शब्द प्रयोग गरेको छ त त्यो ती अर्थहरुका अनुसार हो जो अरबी शब्दार्थहरुका आधारमा उनका बीच छ । अतः शाब्दिक प्रयोगका मुक़ाबिलामा धार्मिक तथ्यहरुलाई लिनु अधिक अनिवार्य छ धार्मिक तथ्यहरुका आधारमा उनका मध्ये त्यही अन्तर छ, जो जिब्रील अलैहिस्सलामको हदीसबाट सिद्ध छ । जब नबी सल्लल्लाहु अलैहि व सल्लमसित सोधियो कि इस्लाम के हो ? त उहाँले भन्नुभोः لا إله إلا الله (ला एलाह इल्लल्लाह) को साक्ष्य, नमाज़को स्थापना ज़कात दिनु, हज्ज तथा रमज़ानका महिना रोज़ा (ब्रत) । तथा जब ईमानका विषयमा प्रश्न गरियो त भन्नुभयो : अल्लाहमाथि ईमान स्वीकार्नु, त्यसका फरिश्ताहरु, किताबहरु, रसूलहरु, प्रलयको दिन तथा राम्रो एवं नराम्रो भाग्यप्रति विश्वास राख्नु । अर्थात हृदयले यी कुराहरुमाथि विश्वास राख्नु तथा आज्ञा एवं कर्तव्यहरुको पालना इस्लाम हो । यस आधारमा प्रत्येक मोमिन मुसलमान तथा प्रत्येक मुसलमान मोमिन हो । (फ़तहुल क़दीर)) तथा जो मानिस मोमिन तथा मुस्लिमका बीच अन्तर गर्दछन् उनी भन्दछन् कि यो सही हो कि यहाँ कुर्आनले एउटै गिरोहका लागि मोमिन तथा मुस्लिमका शब्द प्रयोग गरेका छन्, परन्तु यिनका बीच जुन अन्तर छ, त्यसका आधारमा प्रत्येक मोमिन मुस्लिम पनि छ तैपनि प्रत्येक मुस्लिमको मोमिन हुने कुरो आवश्यक छैन । (इब्ने क़सीर) जे पनि होस् यो ज्ञान सम्बन्धी बहस हो तथा दुबै गिरोहहरुका पास आ-आफ्ना तर्क छन् ।

[1]यो आयत अथवा पूर्ण लक्षण ती प्रकोपका चिन्ह हुन् जो यी विध्वस्त वस्तीहरुमा एक युगसम्म शेष रहे । तथा यो संकेत पनि उनैका लागि छन् जो ईश्वरीय प्रकोपको भय राख्दछन्, किनकि शिक्षा तथा सदुपदेशको प्रभाव पनि स्वीकार गर्दछन् तथा आयतहरु (निशानीहरु) मा चिन्तन-मनन पनि ती नै गर्दछन् ।

فَتَوَلَّىٰ بِرُكْنِهِۦ وَقَالَ سَٰحِرٌ أَوْ مَجْنُونٌ ۝٣٩

(३९) त त्यसले आफ्नै बलमा मुख फर्कायो[1] तथा भन्नथाल्यो कि यो जादूगर हो अथवा दिवाना हो ।

فَأَخَذْنَٰهُ وَجُنُودَهُۥ فَنَبَذْنَٰهُمْ فِى ٱلْيَمِّ وَهُوَ مُلِيمٌ ۝٤٠

(४०) अन्तत: हामीले त्यसलाई तथा त्यसको सेनालाई आफ्नो यातनामा समातेर समुद्रमा हालिदियौं, त्यो थियो नै निन्दनीय ।[2]

وَفِى عَادٍ إِذْ أَرْسَلْنَا عَلَيْهِمُ ٱلرِّيحَ ٱلْعَقِيمَ ۝٤١

(४१) त्यसैप्रकार आदहरुमध्ये पनि[3] (हाम्रो तर्फबाट चेतावनी छ) जबकि हामीले उसमाथि बाँझ (अशुभ) आँधी पठायौं ।[4]

مَا تَذَرُ مِن شَىْءٍ أَتَتْ عَلَيْهِ إِلَّا جَعَلَتْهُ كَٱلرَّمِيمِ ۝٤٢

(४२) त्यो जुन-जुन वस्तुमाथि जान्थ्यो, त्यसलाई जीर्ण अस्थिहरुको जस्तै चूर-चूर गरिदिन्थ्यो ।[5]

وَفِى ثَمُودَ إِذْ قِيلَ لَهُمْ تَمَتَّعُوا۟ حَتَّىٰ حِينٍ ۝٤٣

(४३) तथा समूद (को कथा) मा पनि (शिक्षा छ) जब उनीसित भनियो कि तिमी केही दिनसम्म लाभ उठाइहाल ।[6]

---

[1] दृढ पहलू (पक्ष) लाई रुक्न भन्दछन् । यहाँ अभिप्राय त्यसको आफ्नो शक्ति तथा सेना हो ।

[2] अर्थात त्यसका काम नै यस्ता कि जसका लागि त्यो निन्दाको पात्र थियो ।

[3] أي : تركنا في قصة عاد آية आदको कथामा पनि हामीले निशानी छाड्यौं ।

[4] الرِّيحَ العَقِيمَ (बाँझ हावा) जसमा शुभ-सम्पन्नता थिएन । त्यो हावा वृक्षहरुलाई फलदार गर्नेवाली थिएन न वर्षाको सन्देशवाहक, बरु केवल विनाश एवं प्रकोपको आयु थियो।

[5] यो त्यस हावाको प्रभाव थियो जो आदका समुदायमाथि प्रकोपका रुपमा पठाइएको थियो । यो प्रचण्ड वायु सात रात तथा आठ दिन निरन्तर चलिरहयो । (अल-हाक्क: ७)

[6] अर्थात जब उनले आफूले नै माँग गरिएको चमत्कारबाट प्रकट ऊटनीलाई वध गरिदिए त उनीसित भनियो कि अब तीन दिन तिमी अझ संसारको स्वाद लिइहाल । तीन दिनका पश्चात तिमी ध्वस्त गरिदिइनेछौ । यो त्यसैतिर संकेत हो । केही ज्ञाताहरुले यसलाई स्वालेह अलैहिस्सलामको नबूअतका आरम्भको वचन मानेका छन् । शब्दहरुको यो अर्थ पनि हुनसक्छ । बरु पूर्व वाक्य-क्रमबाट यही अर्थ अधिक उचित छ ।

فَعَتَوْا عَنْ أَمْرِ رَبِّهِمْ فَأَخَذَتْهُمُ الصَّاعِقَةُ وَهُمْ يَنْظُرُونَ ﴿٤٤﴾

(४४) परन्तु उनीहरुले आफ्ना प्रभुका आदेशहरुको अवहेलना गरे, जसका लागि उनलाई उनीहरुले हेर्दाहेर्दै (तीब्र) कडक[1] ले नष्ट गरिदियो ।

فَمَا اسْتَطَاعُوا مِنْ قِيَامٍ وَمَا كَانُوا مُنْتَصِرِينَ ﴿٤٥﴾

(४५) अनि न त उनी उभिन सके[2] तथा न बदला लिनसके ।[3]

وَقَوْمَ نُوحٍ مِنْ قَبْلُ إِنَّهُمْ كَانُوا قَوْمًا فَاسِقِينَ ﴿٤٦﴾

(४६) तथा नूह (अलैहिस्सलाम) का समुदायको पनि यसभन्दा पूर्व (यही अवस्था भएको थियो) उनीहरु पनि बडो अवज्ञाकारी मानिस थिए ।

وَالسَّمَاءَ بَنَيْنَاهَا بِأَيْدٍ وَإِنَّا لَمُوسِعُونَ ﴿٤٧﴾

(४७) तथा आकाशलाई हामीले (आफ्ना) हातहरुले बनाएका हौं[4] तथा नि:सन्देह हामी विस्तार गर्नेवाला छौं ।[5]

وَالْأَرْضَ فَرَشْنَاهَا فَنِعْمَ الْمَاهِدُونَ ﴿٤٨﴾

(४८) तथा धर्तीलाई हामीले फर्श बनाइदिएका छौं,[6] त हामी निकै राम्रा ओछ्यानेवाला छौं ।

---

[1]यो صاعِقَة (तीब्र कड्क) आकाशीय चित्कार थियो तथा त्यसका साथ तलबाट رَجْفَة (भूकम्प) थियो, जस्तो कि सूर: आराफ-७८ मा छ ।

[2]कि उनीहरु भाग्न सकून् ।

[3]अर्थात अल्लाहको प्रकोपबाट स्वयंलाई बचाउन सकेनन् ।

[4]नूहको समुदाय, आद, फ़िरऔन तथा समूद आदि समुदायहरुभन्दा निकै पहिला गुज्रिसकेको छ । यसले पनि अल्लाहको आज्ञापालनको साटो विद्रोहको मार्ग अपनाएको थियो । अन्तत: त्यसलाई जलमा डुबाइदिइयो ।

[5]السَّمَاءَ को ज़बर (अ को मात्रा) بَنَيْنَا का कारण छ जो लुप्त छ । بَنَيْنَا السَّمَاءَ بَنَيْنَاهَا

[6]अर्थात् पहिला नै निकै विशाल छ परन्तु हामीले यसलाई त्यसभन्दा पनि अधिक विस्तृत सामर्थ्य राख्दछौं, अथवा आकाशबाट वर्षा गरी जीविका विस्तृत गर्नुको सामर्थ्य राख्दछ अथवा مُوسِعٌ लाई وُسْعٌ बाट मानियोस् (शक्ति तथा सामर्थ्य राख्नेवाला) त अर्थ हुन्छ कि हामीमा यस्ता अरु पनि आकाश तथा धर्ती बनाउनुको सामर्थ्य तथा शक्ति मौजूद छ । हामी आकाश तथा धर्ती बनाएर थाकेका छैनौ, बरु हाम्रो शक्ति तथा सामर्थ्य असीम छ ।

[7]अर्थात ओछ्यान जस्तै त्यसलाई ओछ्याइदियौं ।

وَمِن كُلِّ شَيْءٍ خَلَقْنَا زَوْجَيْنِ لَعَلَّكُمْ تَذَكَّرُونَ ﴿٤٩﴾

(४९) तथा प्रत्येक वस्तुलाई हामीले जोडा-जोडा पैदा गरेका छौं[1] ताकि तिमी शिक्षा प्राप्त गर ।[2]

فَفِرُّوا إِلَى اللَّهِ إِنِّي لَكُم مِّنْهُ نَذِيرٌ مُّبِينٌ ﴿٥٠﴾

(५०) त तिमी अल्लाहतिर दौड-भाग (अर्थात ध्यान) गर ।[3] निःसन्देह म तिमीलाई त्यसतिर स्पष्ट रुपमा सचेत गर्नेवाला हूँ ।

وَلَا تَجْعَلُوا مَعَ اللَّهِ إِلَٰهًا آخَرَ إِنِّي لَكُم مِّنْهُ نَذِيرٌ مُّبِينٌ ﴿٥١﴾

(५१) तथा अल्लाहका साथ कुनै अन्यलाई पूज्य नबनाउ । निःसन्देह म तिमीलाई त्यसतिर बाट स्पष्ट रुपमा सचेतक हूँ ।[4]

كَذَٰلِكَ مَا أَتَى الَّذِينَ مِن قَبْلِهِم مِّن رَّسُولٍ إِلَّا قَالُوا سَاحِرٌ أَوْ مَجْنُونٌ ﴿٥٢﴾

(५२) यसैप्रकार जो मानिस उनीभन्दा पूर्व गुज्रेका छन्, उनका पासमा जो पनि रसूल आए उनले भनिदिए कि या त यो जादूगर हो अथवा दिवाना हो ।

أَتَوَاصَوْا بِهِ ۚ بَلْ هُمْ قَوْمٌ طَاغُونَ ﴿٥٣﴾

(५३) के यिनीहरु यस कुराको एक-अर्कालाई वसीयत गर्दछन्,[5] होइन बरु यी सबै उद्दण्ड हुन् ।[6]

---

[1]अर्थात् प्रत्येक वस्तुको जोडी-जोडी भाले तथा पोथी अथवा त्यसका मुक़ाबिल तथा विलोमलाई पनि पैदा गरेका छौं । जस्तै प्रकाश-अन्धकार, थल-जल, चन्द्र-सूर्य, गुलियो-तितो, रात-दिन, राम्रो-नराम्रो, जीवन-मृत्यु, ईमान-कुफ्र, सौभाग्य-दूर्भाग्य, स्वर्ग-नरक, जिन्न-मानिस आदि । यहाँसम्मकि जीवधारीको तुलनामा निर्जीव । अतः आवश्यक छ कि संसारको पनि जोडा होस् अर्थात् परलोक, संसारका मुक़ाबिलामा अन्य जीवन ।

[2]यो जानीहाल कि यी सबैको रचयिता मात्र एक अल्लाह हुन्, जसको कोही शरीक (साझेदार) छैन ।

[3]अर्थात् कुफ्र (अविश्वास) तथा अवज्ञाबाट तौबा तथा क्षमा माँगेर तुरुन्त अल्लाहका सदनमा झुकिहाल, यसमा विलम्ब नगर ।

[4]अर्थात तिमीलाई हामीले प्रष्टरुपमा तर्सायौं तथा तिम्रो हित गरिराखेको छु कि केवल एक अल्लाहतिर झुक । उसैमाथि विश्वास तथा भरोसा गर तथा मात्र उसै एकको इबादत गर । त्यसका साथ अन्य उपास्यहरुलाई शरीक (साझी) नगर । यस्तो गर्छौ भने याद राख कि स्वर्गका सुविधा तथा सुखहरुबाट सधैंका लागि बञ्चित भइहाल्नेछौ ।

[5]अर्थात् प्रत्येक पछि आउने जातिहरुले यसैप्रकार अल्लाहका रसूलहरुको इन्कार गरे र उनलाई जादूगर तथा उन्मादग्रस्त भने, जस्तै पहिला समुदाय आगामी समुदायहरुलाई वसीयत गरी जाँदैगरे । एकका पश्चात प्रत्येक समुदायले यही मार्ग अपनायो ।

[6]एक-अर्कालाई वसीयत त होइन बरु प्रत्येक समुदाय नै आ-आफ्नो ठाउँमा उद्दण्ड छ ।

فَتَوَلَّ عَنْهُمْ فَمَآ أَنتَ بِمَلُومٍ ۝٥٤

(५४) तसर्थ तपाईं उनीहरुबाट मुख फर्काइहाल्नुस्, तपाईंमाथि कुनै आरोप छैन ।

وَذَكِّرْ فَإِنَّ الذِّكْرَىٰ تَنفَعُ الْمُؤْمِنِينَ ۝٥٥

(५५) तथा शिक्षा दिँदैरहनुस्, निश्चय यो शिक्षा ईमान भएकाहरुलाई लाभ दिनेछ ।[1]

وَمَا خَلَقْتُ الْجِنَّ وَالْإِنسَ إِلَّا لِيَعْبُدُونِ ۝٥٦

(५६) मैले जिन्नात एवं मुसलमानहरुलाई मात्र यसैकारण पैदा गरेको छु कि उनीहरु केवल मेरो इबादत गरून् ।[2]

مَآ أُرِيدُ مِنْهُم مِّن رِّزْقٍ وَمَآ أُرِيدُ أَن يُطْعِمُونِ ۝٥٧

(५७) न म उनीसित जीविका चाहन्छु, न मेरो यो इच्छा छ कि उनीहरुले मलाई खुवाऊन् ।[3]

إِنَّ اللَّهَ هُوَ الرَّزَّاقُ ذُو الْقُوَّةِ الْمَتِينُ ۝٥٨

(५८) अवश्य अल्लाह (तआला) त स्वयं जीविका प्रदान गर्ने शक्तिशाली एवं बलवान छ ।

فَإِنَّ لِلَّذِينَ ظَلَمُوا ذَنُوبًا مِّثْلَ ذَنُوبِ

(५९) त जसले अत्याचार गरेका छन्, उनीहरुलाई पनि उनका साथीहरुका भागका समान

यसकारण ती सबका हृदय समान छन् तथा उनका चरित्र पनि मिल्दा-जुल्दा छन् । यसकारण पछिल्लाहरुले त्यही समय भने जो अघिकाहरुले भने तथा गरे ।

[1]यसकारण कि सदुपदेश लाभ तिनैलाई पुग्छ । अथवा अभिप्राय यो हो कि तपाईं शिक्षा दिँदैरहनुस्, यसबाट तिनले अवश्य लाभ प्राप्त गर्नेछन् जसका सम्बन्धमा अल्लाहका ज्ञानमा छ कि उनीहरुले ईमान स्वीकार गर्नेछन् ।

[2]यसमा अल्लाहका त्यस इरादा (मशीयत) लाई व्यक्त गरियो जो धर्म विधानका अनुसार त्यो भक्तहरुबाट चाहन्छ कि सम्पूर्ण मानव र जिन्नले मात्र एक अल्लाहको उपासना गरून् तथा आज्ञापालन पनि उसै एकको गरून् । यदि यसको सम्बन्ध उत्पत्तिका इरादाले भएको भए त सबै उसको बन्दना तथा आज्ञापालनका लागि विवश हुन्थे तथा कोही त्यसबाट विमुख हुनुको सामर्थ्य राख्दैनथ्यो । अर्थात् यसमा मानिस तथा जिन्नहरुलाई उनका जीवनको उद्देश्य स्मरण गराइएको छ, जसलाई यदि उनीहरुले बिर्सेर राखे त आखिरतमा कडा जाँचबुझ हुनेछ तथा उनी त्यस परीक्षामा विफल मानिनेछन् जसमा अल्लाहले उनीहरुलाई इरादा तथा पसन्दको स्वाधीनता दिएको छ ।

[3]अर्थात मेरो इबादत तथा आज्ञापालनसित मेरो उद्देश्य यो होइन कि यिनीहरुले मलाई कमाएर खुवाउन्, जस्तो कि अरु असत्य स्वामीहरुको हुन्छ, बरु जीविकाका सबै कोष त मेरै पासमा छ, मेरो उपासना तथा आज्ञापालनबाट त स्वयं उनैको लाभ हुनेछ ।

أَصْحَٰبِهِمْ فَلَا يَسْتَعْجِلُونِ ۝٥٩

भाग प्राप्त हुनेछ ।[१] अतः उनीहरु मसित शीघ्र नगरून् ।[२]

فَوَيْلٌ لِّلَّذِينَ كَفَرُوا۟ مِن يَوْمِهِمُ ٱلَّذِى يُوعَدُونَ ۝٦٠

(६०) त खराबी छ नास्तिकहरुलाई उनका त्यस दिनको जसको उनी वचन दिइन्छन् ।

## سُورَةُ الطُّورِ

## सूरतु तूर-५२

सूरः तूर मक्कामा अवतरित भएको तथा यसमा उनान्चास आयतहरु एवं दुई रूकूअ छन् ।

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

وَٱلطُّورِ ۝١

(१) सौगन्ध छ तूरको ।[३]

وَكِتَٰبٍ مَّسْطُورٍ ۝٢

(२) तथा लेखिएको किताबको ।[४]

فِى رَقٍّ مَّنشُورٍ ۝٣

(३) जो भिल्लीका खुल्ला पृष्ठहरुमा छ ।[५]

وَٱلْبَيْتِ ٱلْمَعْمُورِ ۝٤

(४) तथा आबाद घरको ।[६]

---

[१] ذَنُوب (ज़नूब) को अर्थ भरिएको डालो हो । इनारहरुबाट डालोमा पानी निकालेर बाँडिन्छ, यसैकारण यहाँ डालोलाई भागका अर्थमा प्रयुक्त गरिएको छ । अभिप्राय यो हो कि अत्याचारीहरुलाई यातनाले भाग प्राप्त हुनेछ, जस्तै यसबाट पहिला कुफ्र तथा शिर्क गर्नेवालाहरुलाई उनको यातनाको भाग पाइएको थियो ।

[२] किन्तु यो यातनाको भाग उनीहरुले कहिले पुग्नेछ, यो अल्लाहको इच्छामा निर्भर छ । यसकारण प्रकोपको माँगमा शीघ्रता नगरून् ।

[३] तूर त्यो पर्वत हो जसमाथि (मूसा अलैहिस्सलाम) सित अल्लाहले कुरा गर्नुभयो । त्यसलाई तूर सीना पनि भनिन्छ । अल्लाहले त्यसका यसै महत्वका कारण त्यसको शपथ लिएको छ ।

[४] مَسْطُور (मस्तूर) को अर्थ हो लिखित वस्तु, यसका विभिन्न चरितार्थ वर्णन गरिएका छन् । कुरआन मजीद, लौहे महफूज़ (सुरक्षित पट्टिका) सबै अवतरित किताबहरु अर्थात् मानिसहरुका कर्म जो फरिश्ताहरु लेख्दछन् ।

[५] यो مَسْطُور सित सम्बन्धित छ । رَقّ (रक्क) यो पातलो छाला जसमा लेखिन्थ्यो । مَنْشُور (मंशूर) को अर्थ हो फैलिएको तथा खुला भएको ।

[६] यो بيت معمور (बैते मअमूर) सातौं आकाशमा त्यो बन्दना गृह हो जसमा फरिश्ताहरु इबादत गर्दछन् । यो बन्दनागृह फरिश्ताहरुबाट यसप्रकार भरिएको रहन्छ कि प्रतिदिन सत्तरी

| | |
|---|---|
| (५) तथा अग्ला छतको ।[1] | وَالسَّقْفِ الْمَرْفُوْعِ ۝٥ |
| (६) तथा भड्काइएका सागरको ।[2] | وَالْبَحْرِ الْمَسْجُوْرِ ۝٦ |
| (७) नि:सन्देह तपाईंका प्रभुको प्रकोप भएर नै रहनेछ । | اِنَّ عَذَابَ رَبِّكَ لَوَاقِعٌ ۝٧ |
| (८) त्यसलाई रोक्ने कोही छैन ।[3] | مَّا لَهٗ مِنْ دَافِعٍ ۝٨ |
| (९) जुन दिन आकाश प्रकम्पित हुन थाल्नेछ ।[4] | يَّوْمَ تَمُوْرُ السَّمَآءُ مَوْرًا ۝٩ |

हजार फरिश्ताहरु इबादतका लागि त्यसमा प्रवेश गर्छन्, जसको पुन: प्रलयसम्म दोस्रो पटक पालो आउने छैन, जस्तो कि मेराजका हदीसहरुमा वर्णन गरिएको छ । केही विद्वानहरुले बैते मअमूरसित खानये काअबा अभिप्राय लिएका छन् जो उपासनाका लागि आउने मनुष्यहरुबाट प्रत्येक समय भरिएको रहन्छ । मअमूरको अर्थ हो आबाद तथा भरिएको ।

[1]यसबाट अभिप्राय आकाश हो जो धर्तीको लागि छतका समान छ । कुर्आनले त्यसलाई अर्को स्थानमा 'सुरक्षित छत' भनेको छ । ﴿وَجَعَلْنَا السَّمَاءَ سَقْفًا مَّحْفُوظًا ۖ وَهُمْ عَنْ آيَاتِهَا مُعْرِضُونَ﴾ अल अम्बिया-३२) केही ज्ञाताहरुले यसबाट अर्श तात्पर्य लिएका छन् जो सबै आपत्तिहरुका लागि छत हो ।

[2]مسجور (मस्जूर) को अर्थ हो भड्केको । केही ज्ञाताहरु भन्छन् कि यसबाट अभिप्राय त्यो पानी हो जो अर्शको मुनि छ जसबाट केयामत (प्रलय) को दिन वर्षा हुनेछ । त्यसबाट मृत शरीर जीवित हुनेछन् । केही विद्वान भन्छन् कि यसबाट अभिप्राय सागर हो, तिनमा क्यामतका दिन आगो भड्किनेछ, जस्तो कि भन्नुभयो:

﴿وَإِذَا الْبِحَارُ سُجِّرَتْ﴾

"तथा जब सागर भड्काउनेछन् ।" (अत्तकवीर-६)

इमाम शौकानीले यसै भावार्थलाई उत्तम मानेका छन् । केही धर्मविदहरुले मस्जूरको अर्थ भरिएको लिएका छन् । इमाम तबरीले यसै कथनलाई लिएका छन् । यसका अरु पनि कैयन् अर्थ वर्णन गरिएका छन् । (हेर्नुस् तफ़सीर इब्ने क़सीर)

[3]यो उपरोक्त सौगन्धहरुको उत्तर हो । अर्थात् यी सबै वस्तुहरु अल्लाहको महाशक्तिको प्रदर्शन हो, यस कुराको प्रमाण हो कि अल्लाहको त्यो प्रकोप पनि निश्चय भएर रहनेछ जसको उसले वाचा गरेको छ । त्यसलाई हटाउनुभन्दा कोही समर्थ हुनेछैन ।

[4]مور (मौर) को अर्थ हो गति तथा उथल-पुथल केयामतका दिन आकाशका प्रबन्धमा जो उथल-पुथल तथा ताराहरुका टूट-फूटका कारण जो बिखराव पैदा हुनेछ, त्यसलाई यी शब्दहरुमा व्यंजित गरिएको छ, तथा यो उपरोक्त यातनाका लागि समय छ । अर्थात् छोडेर कपासका भुवा समान तथा रेतका काँडाहरु जस्तै उडेर जानेछन् ।

وَّ تَسِيْرُ الْجِبَالُ سَيْرًا ⑩

(१०) तथा पर्वत हिंड्डुल गर्न थाल्नेछन् ।

فَوَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ⑪

(११) त्यस दिन झुठ्लाउनेहरुको (पूर्ण) खराबी छ ।

الَّذِيْنَ هُمْ فِيْ خَوْضٍ يَّلْعَبُوْنَ ⑫

(१२) जो आफ्ना अनायास कुराहरुमा उफ्रिराखेका छन् ।[1]

يَوْمَ يُدَعُّوْنَ اِلٰى نَارِ جَهَنَّمَ دَعًّا ⑬

(१३) जुन दिन उनीहरु धक्का दिइएर[2] नरकको आगोतिर ल्याइनेछन् ।

هٰذِهِ النَّارُ الَّتِيْ كُنْتُمْ بِهَا تُكَذِّبُوْنَ ⑭

(१४) यही (नरकको) त्यो अग्नि हो जसलाई तिमीले झूठ भन्दथ्यौ ।[3]

اَفَسِحْرٌ هٰذَآ اَمْ اَنْتُمْ لَا تُبْصِرُوْنَ ⑮

(१५) (अब भन) के यो जादू हो ?[4] अथवा तिमी देख्दै-देख्दनौ ।[5]

اِصْلَوْهَا فَاصْبِرُوْٓا اَوْ لَا تَصْبِرُوْا ۚ سَوَآءٌ عَلَيْكُمْ ؕ اِنَّمَا تُجْزَوْنَ مَا كُنْتُمْ تَعْمَلُوْنَ ⑯

(१६) यसमा जाउ, (नरकमा) अब तिमीबाट धैर्य राख्नु तथा नराख्नु तिम्रा लागि समान छ । तिमीलाई केवल तिम्रा कर्महरुको प्रतिफल दिइनेछ ।

اِنَّ الْمُتَّقِيْنَ فِيْ جَنّٰتٍ وَّ نَعِيْمٍ ⑰

(१७) निःसन्देह सदाचारी मानिस स्वर्गमा तथा सुखहरुमा छन् ।[6]

---

[1]अर्थात आफ्ना कुफ्र तथा असत्यमा लीन तथा सत्यलाई झुठ्लाउन र उपहासमा लागेका छन् ।

[2] الدَّعُّ (अद्दअ) को अर्थ हो बडो कडाईका साथ धकाल्नु ।

[3]यो नरकमा नियुक्त फरिश्ताहरु (ज़बानियः) उनीहरुलाई भन्नेछन् ।

[4]जस्तो तिमी संसारमा पैगम्बरहरुलाई जादूगर भन्ने गर्थ्यौ, भन के यो पनि जादूको कुनै काम हो ?

[5]अथवा जुनप्रकार तिमी संसारमा सत्यका दर्शनबाट अन्धा थियौ, यो दण्ड पनि तिमीले बुझिराखेका छैनौ ? यो झपार्नका लागि उनीहरुलाई भनिएको छ, अन्यथा प्रत्येक वस्तु उनका दर्शनमा आइसकेको हुनेछ ।

[6]काफ़िर तथा हतभागाहरुका पश्चात ईमानवाला तथा भाग्यशालीहरुको चर्चा गरिदैछ ।

فَٰكِهِينَ بِمَآ ءَاتَىٰهُمْ رَبُّهُمْ وَوَقَىٰهُمْ رَبُّهُمْ عَذَابَ ٱلْجَحِيمِ ⑱

(१८) उनीहरुलाई जे उनका प्रभुले प्रदान गरेको छ, त्यसमा प्रसन्न छन् ।[1] तथा उनलाई उनका प्रभुले नरकको यातनाबाट पनि बचाइहालेको छ ।

كُلُوا۟ وَٱشْرَبُوا۟ هَنِيٓـًٔۢا بِمَا كُنتُمْ تَعْمَلُونَ ⑲

(१९) तिमी मजासँग खाने-पिउने गरिरह ती कर्महरुका प्रतिफल स्वस्थ जो तिमीले गर्दथ्यौ ।[2]

مُتَّكِـِٔينَ عَلَىٰ سُرُرٍ مَّصْفُوفَةٍ ۖ وَزَوَّجْنَٰهُم بِحُورٍ عِينٍ ⑳

(२०) समतल ओछ्याइएका सुन्दर तख्तामाथि तकिया लगाइराखेको अवस्थामा ।[3] तथा हामीले उनका विवाह ठूला-ठूला आँखा भएका हूरहरुसित गरिदिएका छौं ।

وَٱلَّذِينَ ءَامَنُوا۟ وَٱتَّبَعَتْهُمْ ذُرِّيَّتُهُم بِإِيمَٰنٍ أَلْحَقْنَا بِهِمْ ذُرِّيَّتَهُمْ وَمَآ أَلَتْنَٰهُم مِّنْ عَمَلِهِم مِّن شَىْءٍ ۚ كُلُّ ٱمْرِئٍۭ

(२१) तथा जो मानिस ईमान स्वीकार गरे तथा उनको सन्तानले पनि ईमानमा उनको अनुगमन गरे हामी उनको सन्तानलाई उनीसम्म पुऱ्याइदिनेछौं तथा उनका कर्महरुबाट हामीले केही कम गर्ने छैनौं ।[4]

---

[1]अर्थात् स्वर्गका घर, खानाहरु, वस्त्र, सवारीहरु, सुन्दर पत्नी तथा अन्य सुखहरु ती सबैमा उनी आनन्दित हुनेछन् किनकि यो वरदान संसारका सुखहरुभन्दा अत्याधिक बढी हुनेछन् तथा مَالاَ عَينٌ رَأَتْ ولاَ أُذُنٌ سَمِعَتْ ولاَ خَطَرَ عَلَى قَلْبِ بَشَرٍ को चरितार्थ ।

[2]अर्को स्थानमा भन्नुभयो: ﴿كُلُوا۟ وَٱشْرَبُوا۟ هَنِيٓـًٔۢا بِمَآ أَسْلَفْتُمْ فِى ٱلْأَيَّامِ ٱلْخَالِيَةِ﴾ (अल-हाक्क:-२४) यसबाट ज्ञात भयो कि अल्लाहको दया प्राप्त गर्नका लागि ईमानका साथ सत्कर्म अति आवश्यक छ ।

[3]مَصْفُوفَـةٍ (मस्फ़ूफ़:) एक-अर्कासित जोडिएको जस्तो कि उनी प्रतिबद्ध छन् अथवा केही ज्ञाताहरुले त्यसको वर्णन गरेका छन् कि उनी परस्पर सम्मुख हुनेछन्, जस्तै रणक्षेत्रमा सेनाहरु सम्मुख हुन्छन् । यस भावलाई कुर्आनका अन्य स्थानमा यसप्रकार वर्णन गरिएको छ :

﴿عَلَىٰ سُرُرٍ مُّتَقَٰبِلِينَ﴾

"एक-अर्काका सम्मुख आसनहरुमा आसीन हुनेछन् ।" (अस्साफ़्फ़ात-४४)

[4]अर्थात जसका पिता आफ्नो स्वच्छता सदाचार तथा सत्कर्मका कारण स्वर्गका उच्च श्रेणीहरुमा पदासीन हुनेछन्, अल्लाह तआला उनको सन्तानका पनि पद उच्च गरेर उनलाई उनका पिताहरुका साथ भेट गराइदिनेछ । यो गर्ने छैन कि उनका पिताहरुका पद घटाएर उनको सन्तानको तल्लो श्रेणीहरुमा उनलाई ल्याओस् । अर्थात् ईमान भएकाहरुमाथि दोहोरो अनुग्रह गर्नेछ । एक त यो कि पिता तथा पुत्रहरुको परस्पर मिलन गराइदिनेछ ताकि

| | |
|---|---|
| بِمَا كَسَبَ رَهِينٌ ﴿٢١﴾ | प्रत्येक व्यक्ति आ-आफ्ना कर्महरुको गिरवी (जिम्मेवार) छ ।[1] |
| وَأَمْدَدْنَاهُم بِفَاكِهَةٍ وَلَحْمٍ مِّمَّا يَشْتَهُونَ ﴿٢٢﴾ | (२२) हामीले उनका लागि फलहरु तथा रुचिकर मासुको प्राचुर्य गरिदिनेछौं ।[2] |
| يَتَنَازَعُونَ فِيهَا كَأْسًا لَّا لَغْوٌ فِيهَا | (२३) (प्रसन्नताका साथ) उनीहरु एक-अर्कासित (मदिराका) प्यालाको हारालुछ गर्नेछन्,[3] जुन शराब (मदिरा |

उनका नयन शीतल होऊन्, दोस्रो यो कि तल पदहरु भएकालाई उठाएर उच्च पदहरुमा आसीन गरिदिनेछ । अन्यथा दुबैका मिलनको यो पनि तरीका हुनसक्छ कि प्रथम श्रेणी भएकाहरुलाई द्वितीय श्रेणी प्रदान गरिदेओस् । यो कुरा किनकि त्यसका कृपा तथा उपकारका विपरीत हुनेछन्, यसकारण त्यसले यस्तो गर्नेछैन, बरु द्वितीय श्रेणीवालाहरुलाई प्रथम श्रेणी प्रदान गर्नेछ । यो त अल्लाहको त्यो उपकार हो जुन सन्तानमाथि पिताहरुका सत्कर्महरुको बरकत (शुभ) बाट हुनेछ । हदीसमा वर्णित छ कि सन्तानको दुआ (प्रार्थना) तथा इस्तिग़फ़ार (प्रार्थना तथा क्षमा-याचना) बाट पिताहरुको दर्जा पनि बढ्छन् । जब एक व्यक्तिको पद स्वर्गमा उच्च हुन्छ त त्यो सोध्छ कि हे अल्लाह यसको कारण ? अल्लाह तआला भन्छ, "यसको कारण तिम्रो सन्तानको तिम्रा लागि क्षमा-याचनाको प्रार्थना हो ।" (मुसनद अहमद २/५०९) यसको समर्थन त्यस हदीसबाट पनि हुन्छ जसमा चर्चा छ कि मानिस मर्दछ त उसका कर्मको कर्म पनि समाप्त भएर जान्छ, परन्तु तीनवटा कुराहरुको पुण्य मृत्युको पश्चात पनि जारी रहन्छ, एक सदक़ये जारिया (जारी रहने दान), दोस्रो त्यो ज्ञान जसबाट मानिस लाभान्वित हुन्छन्, तेस्रो नेक औलाद (सदाचारी सन्तान) जो त्यसका लागि प्रार्थना गर्दछ । (मुस्लिम, किताबुल वसीय:, बाबु मा यलहकुल इन्सान मिनस सवाबे बाद वफ़ातेही)

[1] رَهِينٌ (रहीन) مَرْهُون (मर्हून) (बंधक) का अर्थमा छ, प्रत्येक व्यक्ति आफ्ना कर्मको बन्धक हुनेछ । यो मोमिन तथा काफ़िर दुबैका लागि सामान्य छ तथा अर्थ यो हो कि जसले जस्तो गर्नेछ त्यस्तै भर्नेछ । अथवा यसबाट अभिप्राय केवल काफ़िर हुन् कि उनी आफ्ना दुष्कर्ममा फँस्नेछन् । जस्तो अर्को स्थानमा भन्यो :

﴿كُلُّ نَفْسٍ بِمَا كَسَبَتْ رَهِينَةٌ ۞ إِلَّا أَصْحَابَ الْيَمِينِ﴾

"प्रत्येक व्यक्ति आफ्ना कर्महरुमा गिरफ्तार हुनेछ । दायाँ हातवालाहरुबाहेक (ईमान भएकाहरु) का ।" (अल-मुद्दस्सिर-३८,३९)

[2] أمددناهم यो زدناهم का अर्थमा छ, अथवा अत्याधिक दिनेछ ।

[3] يتنازعون - يتعاطون و يتناولون एक-अर्कासित लिनेछन् । अथवा त्यो अर्थ हो जो अनुवादमा छ । كأس (कास) त्यस प्याला तथा जामलाई भन्दछन् जो मदिरा अथवा अन्य कुनै पेय पदार्थमा भरिएको हुन्छ । खाली भाँडोलाई कास भन्दैनन् । (फ़तहुल क़दीर)

وَلَا تَأْثِيمٌ ﴿٢٣﴾

का आनन्दमा न अपशब्द निस्कनेछन् तथा न पाप हुनेछ ।[1]

وَيَطُوفُ عَلَيْهِمْ غِلْمَانٌ لَّهُمْ كَأَنَّهُمْ لُؤْلُؤٌ مَّكْنُونٌ ﴿٢٤﴾

(२४) तथा उनका चारैतिर सेवाका लागि (सेवक) बालक हिंड्डुल गरिराखेका हुनेछन्, जस्तो कि उनी मोती थिए जो लुकाएर राखिएका थिए ।[2]

وَأَقْبَلَ بَعْضُهُمْ عَلَىٰ بَعْضٍ يَتَسَاءَلُونَ ﴿٢٥﴾

(२५) तथा आपसमा एक-अर्कातिर मुख गरेर प्रश्न गर्नेछन् ।[3]

قَالُوا إِنَّا كُنَّا قَبْلُ فِي أَهْلِنَا مُشْفِقِينَ ﴿٢٦﴾

(२६) भन्नेछन् कि यसभन्दा पूर्व हामी आफ्ना घरवालाहरुमा निकै तर्सने गर्दथ्यौं ।[4]

فَمَنَّ اللَّهُ عَلَيْنَا وَوَقَانَا عَذَابَ السَّمُومِ ﴿٢٧﴾

(२७) त अल्लाह (तआला) ले हामीमाथि बडो उपकार गर्‍यो तथा हामीलाई तेज़ गरम हावाहरुका प्रकोपबाट बचाइहाल्यो ।[5]

إِنَّا كُنَّا مِن قَبْلُ نَدْعُوهُ ۖ إِنَّهُ هُوَ الْبَرُّ الرَّحِيمُ ﴿٢٨﴾

(२८) हामीले यसका पूर्व नै त्यसको इबादत गरिरहन्थ्यौं,[6] निःसन्देह त्यो अत्यन्त परोपकारी एवं अत्यन्त दयालु छ ।

[1]त्यस मदिरामा सांसारिक मदिराको प्रभाव हुनेछैन । त्यसलाई पिएर न कोही बहकिनेछ कि अपशब्द भनोस्, त यति बेसुध हुनेछ कि पाप गरोस् ।

[2]अर्थात् स्वर्गवासीहरुको सेवाको लागि त्यसलाई नव-युवक सेवक पनि दिइनेछन् जो उनको सेवाका लागि हिंडिराखेका हुनेछन् । सुन्दरता एवं शोभा तथा स्वच्छता एवं सफाईमा यस्ता हुनेछन् जस्ता मोती, जसलाई ढाकिएर राखिएको छ ताकि हात लाग्नाले त्यसको चमक कम नहोस् ।

[3]एक-अर्कासित सांसारिक समाचार सोध्नेछन् कि संसारमा कुन दशामा जीवनयापन गरिरहे तथा ईमान एवं कर्मको मागहरु कसरी पूरा गर्दैरहे ।

[4]अर्थात् अल्लाहको यातनाबाट । यसकारण अल्लाहका त्यस दण्डबाट बच्नुको प्रबन्ध पनि गरिरहे, यसकारण कि मानिसलाई जुन कुराको भय हुन्छ, त्यसबाट बच्नका लागि त्यो दौडधूप पनि गर्दछ ।

[5] سَمُوم (समूम) लू, झुल्साइने गरम हावालाई भन्दछन् । नरकका नामहरुमध्ये एउटा नाम पनि हो ।

[6]अर्थात् केवल त्यसै एकको बन्दना (इबादत) गर्दथ्यौ, त्यसका साथ कसैलाई साझी गर्दैनथ्यौ । अथवा यो अर्थ हो कि उसैसित नरकको यातनाबाट बच्नुको प्रार्थना गर्दथ्यौ ।

| | |
|---|---|
| (२९) तसर्थ तपाईं सम्झाउँदै रहनुस्, किनकि तपाईं आफ्ना प्रभुको कृपाले न त काहिन (ज्योतिषी) हुनुहुन्छ न दिवाना ।[१] | فَذَكِّرْ فَمَآ أَنتَ بِنِعْمَتِ رَبِّكَ بِكَاهِنٍ وَلَا مَجْنُونٍ ﴿٢٩﴾ |
| (३०) के (काफ़िर) यसप्रकार भन्दछन् कि यो कवि हो, हामी त्यसका लागि कालचक्र (अर्थात मृत्यु) को प्रतीक्षा गरिराखेका छौं ।[२] | أَمْ يَقُولُونَ شَاعِرٌ نَّتَرَبَّصُ بِهِۦ رَيْبَ ٱلْمَنُونِ ﴿٣٠﴾ |
| (३१) (तपाईं) भनिदिनुस् कि तिमी प्रतिक्षा गर, म पनि तिम्रा साथ प्रतिक्षा गर्नेहरुमा छु ।[३] | قُلْ تَرَبَّصُوا۟ فَإِنِّى مَعَكُم مِّنَ ٱلْمُتَرَبِّصِينَ ﴿٣١﴾ |
| (३२) के उनका बुद्धिहरु उनलाई यही सिकाउँछन् ?[४] अथवा यी मानिस नै उद्दण्ड हुन् ।[५] | أَمْ تَأْمُرُهُمْ أَحْلَٰمُهُم بِهَٰذَآ ۚ أَمْ هُمْ قَوْمٌ طَاغُونَ ﴿٣٢﴾ |
| (३३) के यिनीहरु भन्दछन् कि यस (नबी) ले (कुरआन) स्वयं रचेको छ, वास्तविकता यो हो कि उनी ईमान स्वीकार गर्दैनन् ।[६] | أَمْ يَقُولُونَ تَقَوَّلَهُۥ ۚ بَل لَّا يُؤْمِنُونَ ﴿٣٣﴾ |

[१]यसमा नबी सल्लल्लाहु अलैहि व सल्लमलाई सान्त्वना दिइँदैछ कि तपाईं शिक्षा-दीक्षा तथा उपदेशको काम गर्दैरहनुस् तथा यिनी तपाईंका विषयमा जे-जति भनिराख्छन्, त्यतातिर कान नथाप्नुस्, यसकारण कि तपाईं अल्लाहको कृपाले न काहिन हुनुहुन्छ न उन्मादी (जस्तो कि यिनीहरु भन्दछन्) अपितु तपाईंमाथि हाम्रोतिर बाट प्रकाशना आउँछ, जो काहिनमाथि आउँदैन, तपाईं जो कथन सुनाउनु हुन्छ त्यो बुद्धि एवं ज्ञानको दर्पण हुन्छ, एउटा उन्मादीबाट यस्ता कुरा कसरी सम्भव छ ?

[२]رَيْب (रैब) को अर्थ हो कालचक्र, مَنُون (मनून) मृत्युका नामहरुमध्ये एउटा नाम हो । अभिप्राय यो हो कि मक्काका कुरैश यस प्रतिक्षामा छन् कि कालचक्रबाट सम्भवत: यस (मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम) लाई मृत्यु आइहोलोस् तथा हामीलाई शान्ति प्राप्त होस्, जो यसको तौहीद (अद्वैत) को निमन्त्रणले हामीबाट खोसिहालेको छ ।

[३]अर्थात् हेर कि मृत्यु कसलाई पहिले आउँछ तथा विनाश कसको भाग्य बन्दछ ?

[४]अर्थात् तपाईंका विषयमा जो यिनीहरु यसप्रकार अनर्दल मिथ्या एवं अशुद्ध कुराहरु गर्दैरहन्छन्, के उनका बुद्धिहरुले उनलाई यही सम्झाउँछन् ?

[५]होइन अपितु यी उद्दण्ड तथा पथभ्रष्ट मानिसहरु हुन्, तथा यही उद्दण्डता एवं पथभ्रष्टताले उनीहरुलाई यस कुराहरुका लागि उक्साइराखेको छ ।

[६]अर्थात् कुरआन गढ्नुका आरोपमा उक्साउनेवाला पनि उनको कुफ्र नै हो ।

فَلْيَأْتُوا بِحَدِيثٍ مِّثْلِهِ إِن كَانُوا صَادِقِينَ ﴿٣٤﴾

(३४) तसर्थ यदि यिनी साँचो हुन् भने यस जस्तो एउटा (नै) कुरा यिनी (पनि) त ल्याऊन् ।[1]

أَمْ خُلِقُوا مِنْ غَيْرِ شَيْءٍ أَمْ هُمُ الْخَالِقُونَ ﴿٣٥﴾

(३५) के यिनी बिना कुनै पैदा गर्नेवाला स्वयं नै पैदा भइहालेका छन् ?[2] अथवा यिनी स्वयं पैदा गर्नेवाला हुन् ?[3]

أَمْ خَلَقُوا السَّمَاوَاتِ وَالْأَرْضَ ۚ بَل لَّا يُوقِنُونَ ﴿٣٦﴾

(३६) के उनीहरुले नै आकाशरु तथा धर्तीलाई पैदा गरेका छन् ? बरु यिनी विश्वास नगर्नेहरु हुन् ।[4]

أَمْ عِندَهُمْ خَزَائِنُ رَبِّكَ أَمْ هُمُ الْمُصَيْطِرُونَ ﴿٣٧﴾

(३७) अथवा के यिनका पासमा तिम्रा प्रभुका कोषागार छन् ?[5] अथवा (ती कोषागारहरुका) यिनी रक्षक हुन् ।[6]



[1]अर्थात् यदि आफ्ना दावीमा साँचा छन् कि यो कुर्आन मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) ले स्वयं रच्नु भएको छ त यिनी पनि यस जस्तै किताब बनाएर प्रस्तुत गरिदेऊन्, जो वाक्यक्रम, चमत्कार एवं प्रभात, विचित्र भाषा-शैली, तथ्यहरुको नियति तथा समस्याहरुका समाधानमा यसको मुक़ाबिला गर्नसकोस् ।

[2]अर्थात् यदि वास्तवमा यस्तो छ भने कसैलाई यो अधिकार छैन कि उनीहरुलाई कुनै कुराको आदेश देओस् अथवा रोकोस् । किन्तु जब यस्तो छैन, अपितु उनलाई एउटा स्रष्टाले पैदा गरको छ, त स्पष्ट छ कि त्यसको उनलाई पैदा गर्नुको एउटा विशेष उद्देश्य छ, त्यसले उनीहरुलाई पैदा गरेर यसै कसरी छाडिदिनेछ ?

[3]अर्थात् यिनी स्वयं पनि आफ्ना रचयिता होइनन्, बरु यिनी अल्लाहलाई रचयिता हुने कुरोलाई स्वीकार गर्दछन् ।

[4]बरु अल्लाहका धम्की तथा वाचाहरुका बारेमा सन्देहमा छन् ।

[5]कि जसलाई यिनीहरु चाहन्छन् जीविका प्रदान गरून् तथा जसलाई चाहन्छन्, रोकिदिऊन्, अर्थात जसलाई चाहन्छन् नबूअत (ईशदूत्व) प्रदान गरून् ।

[6] مُصَيْطِر अथवा مُسَيْطِر (मुसैतिर), سَطْر (सतर) बाट बनेको छ, लेखक जो रक्षक तथा निरीक्षक होस् । त्यसले किनकि पूरा विवरण लेख्दछ, यसकारण यो संरक्षक एवं निरीक्षकका अर्थमा पनि प्रयुक्त हुन्छ । अर्थात् के अल्लाहका कोषहरु अथवा त्यसको कृपाहरुमा उनको अधिकार छ जसलाई चाहन्छन् देऊन् अथवा नदेऊन् ।

أَمْ لَهُمْ سُلَّمٌ يَسْتَمِعُونَ فِيهِ ۖ فَلْيَأْتِ مُسْتَمِعُهُم بِسُلْطَانٍ مُّبِينٍ ﴿٣٨﴾

(३८) अथवा के यिनका पासमा कुनै भऱ्याङ छ, जसमाथि चढेर सुन्छन् ?[1] (यदि यस्तो छ) त उनको सुन्नेवाला कुनै स्पष्ट प्रमाण प्रस्तुत गरून् ।

أَمْ لَهُ الْبَنَاتُ وَلَكُمُ الْبَنُونَ ﴿٣٩﴾

(३९) के अल्लाहका त सबै पुत्रीहरु छन् तथा तिम्रा लागि पुत्र छन् ?

أَمْ تَسْأَلُهُمْ أَجْرًا فَهُم مِّن مَّغْرَمٍ مُّثْقَلُونَ ﴿٤٠﴾

(४०) के तिमी यिनीबाट कुनै पारिश्रमिक माँग्दछौ कि यिनी त्यसका बोझले थिचिँदै गइराखेका छन् ?[2]

أَمْ عِندَهُمُ الْغَيْبُ فَهُمْ يَكْتُبُونَ ﴿٤١﴾

(४१) के यिनीसित परोक्षको ज्ञान छ जसलाई यिनीहरु लेखिहाल्छन् ?[3]

أَمْ يُرِيدُونَ كَيْدًا ۖ فَالَّذِينَ كَفَرُوا هُمُ الْمَكِيدُونَ ﴿٤٢﴾

(४२) के यिनीहरु कुनै छल गर्न चाहन्छन् ?[4] त (विश्वास गरिहालून्) कि छल गर्ने गुट काफ़िरहरुको हो ।[5]

أَمْ لَهُمْ إِلَٰهٌ غَيْرُ اللَّهِ ۚ سُبْحَانَ اللَّهِ عَمَّا يُشْرِكُونَ ﴿٤٣﴾

(४३) के अल्लाहका अतिरिक्त उनको कुनै अन्य उपास्य छ ? (कदापि छैन) अल्लाह (तआ़ला) उनका शिर्कबाट (शुद्ध) एवं पवित्र छ ।

---

[1]अर्थात के यो उनको दावी हो कि भऱ्याङद्वारा यिनी पनि मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमका समान आकाशहरुमा गएर फरिश्ताहरुका कुरा अथवा उनको तर्फबाट जुन प्रकाशना गरिन्छ, त्यो सुनेर आएका छन् ।

[2]अर्थात् त्यसलाई अदा गर्नु (तिर्नु) उनका लागि कठिन छ ।

[3]कि अवश्य उनीभन्दा पहिला मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम मरिहाल्नेछन् तथा उनको मृत्यु त्यसका पश्चात आउनेछ ।

[4]अर्थात् हाम्रो पैग़म्बरका साथ, जसबाट त्यसको विनाश हुनजाओस् ।

[5]अर्थात् चाल उनैमाथि फर्केर जान्छ तथा सबै हानि उनैको हुनेछ, जस्तै भन्यो:

﴿وَلَا يَحِيقُ الْمَكْرُ السَّيِّئُ إِلَّا بِأَهْلِهِ﴾

"तथा नराम्रा चालहरुको संकट ती चालवालाहरुमाथि नै पर्दछ ।" (फ़ातिर-४३) जस्तो कि बद्रका रणमा यी काफ़िर मारिए तथा अन्य कैयन् स्थानहरुमा अपमानित भए ।

وَإِن يَرَوْا كِسْفًا مِّنَ السَّمَاءِ سَاقِطًا يَقُولُوا سَحَابٌ مَّرْكُومٌ ﴿٤٤﴾

(४४) यदि यिनीहरु आकाशका कुनै टुक्रालाई खसिराखेको देख्छन्, तैपनि भन्दिन्छन् कि यो पत्रमाथि पत्र बादल हो ।[1]

فَذَرْهُمْ حَتَّىٰ يُلَاقُوا يَوْمَهُمُ الَّذِي فِيهِ يُصْعَقُونَ ﴿٤٥﴾

(४५) तसर्थ तपाईं उनीहरुलाई छोडिदिनुस् यहाँसम्मकि उनीहरु आफ्ना त्यस दिनसित मिल्न जाऊन् जसमा यिनी अचेत गरिदिइनेछन् ।

يَوْمَ لَا يُغْنِي عَنْهُمْ كَيْدُهُمْ شَيْئًا وَلَا هُمْ يُنصَرُونَ ﴿٤٦﴾

(४६) जुन दिन उनीहरुलाई उनको चाल कुनै काम आउने छैन तथा न उनी सहायता गरिनेछन् ।

وَإِنَّ لِلَّذِينَ ظَلَمُوا عَذَابًا دُونَ ذَٰلِكَ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٤٧﴾

(४७) निःसन्देह अत्याचारीहरुका लागि यसका अतिरिक्त अन्य यातनाहरु पनि छन्,[2] परन्तु उनीहरुमध्ये अधिकतर मानिस अन्जान छन् ।[3]

وَاصْبِرْ لِحُكْمِ رَبِّكَ فَإِنَّكَ بِأَعْيُنِنَا وَسَبِّحْ بِحَمْدِ رَبِّكَ حِينَ تَقُومُ ﴿٤٨﴾

(४८) तिमी आफ्ना प्रभुका आदेशको प्रतीक्षामा धैर्यले काम लेउ, निःसन्देह तिमी हाम्रा आँखाका अगाडी छौ । प्रातःकाल जब तिमी उठ्छौ[4] आफ्ना प्रभुको

[1]अभिप्राय यो हो कि आफ्ना कुफ्र तथा उद्दण्डताबाट फर्कन पनि सक्ने छैनन्, बरु अट्टेरीपनाको प्रदर्शन गर्दै भन्नेछन् कि यो प्रकोप होइन बरु एकमाथि अर्को गरी बादल चढिराखेको छ । जस्तो कि केही अवसरहरुमा यस्तो हुन्छ ।

[2]अर्थात् संसारमा, जस्तो अर्को स्थानमा अल्लाहले भन्नुभयो :

﴿وَلَنُذِيقَنَّهُم مِّنَ الْعَذَابِ الْأَدْنَىٰ دُونَ الْعَذَابِ الْأَكْبَرِ لَعَلَّهُمْ يَرْجِعُونَ﴾

"अवश्य हामीले उनीहरुलाई निकटको कुनै सानो यातना यस ठूलो यातनाका अतिरिक्त चखाउनेछौं ताकि उनीहरु फर्किआऊन् ।" (अलिफ.लाम.मीम.अस्सजदः-२१)

[3]यस कुरावाट कि यी सांसारिक प्रकोप तथा आपदा यसकारण छन् कि मानवले अल्लाहतिर ध्यान देओस् । यो कुरा उनी बुझ्दैनन्, यसकारण पापहरुबाट क्षमा माँग्दैनन् । बरु कैयन् पटक पहिलाभन्दा पनि अधिक पापहरुमा लीन हुनजान्छन् । जस्तो एक हदीसमा छ "मुनाफ़िक जब रोगी भई स्वस्थ हुनजान्छ त त्यसको उदाहरण ऊँटको जस्तो हुनजान्छ । त्यो जान्दैन कि उसलाई रस्सीहरुले किन बाँधियो तथा पछि किन खुला छाडियो ?" (सुनन अबू दाऊद, किताबुल जनायज न. ३०८९)

[4]यस उभिनुमध्ये कुनचाहिं उभिनु अभिप्राय हो ? केही जानकारहरु भन्छन् कि जब नमाज़का लागि उभिन्छन्, जस्तो कि नमाज़को आरम्भमा «سُبْحَانَكَ اللَّهُمَّ وَبِحَمْدِكَ وَتَبَارَكَ اسْمُكَ»

وَمِنَ الَّيْلِ فَسَبِّحْهُ وَإِدْبَارَ النُّجُومِ ﴿٤٩﴾

पवित्रता तथा प्रशंसाको वर्णन गर ।
(४९) तथा रात्रिमा पनि त्यसको जप[1] गर तथा ताराहरु अस्ताउने समयमा पनि ।[2]

## سُورَةُ النَّجْمِ

## सूरतुन नज्म-५३

सूर: नज्म* मक्कामा अवतरित भएको, यसमा बासठ्ठी आयतहरु एवं तीन रुकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

---

पढिन्छ । केही ज्ञाताहरु भन्दछन् कि जब ब्यूँभेर उभिन्छन् । त्यस समय पनि अल्लाहको तस्बीह महिमागान तथा प्रशंसा मस्नून (उचित) छ । केही अन्य भन्दछन् कि जब कुनै बैठक (सभा) बाट उभिन्छन् जस्तो कि हदीसमा वर्णित छ जुन व्यक्तिले कुनै बैठकबाट उठ्दाखेरि यो दुआ पढनेछ त उसका बैठकका पापहरु प्रायश्चित हुन जानेछ । «سُبْحَانَكَ اللَّهُمَّ ! وَبِحَمْدِكَ أَشْهَدُ أَنْ لاَ إِلَهَ إِلاَّ أَنْتَ أَسْتَغْفِرُكَ وَأَتُوبُ إِلَيْكَ»
(तिर्मिजी बाबु मा यकूलु इज़ा क़ाम मिन मज्लिसिही)

[1]यसबाट अभिप्राय क्यामुल्लैल अर्थात तहज्जुदको नमाज़ हो, जो आजीवन नबी सल्लल्लाहु अलैहि वसल्लमको नियम रहयो ।

[2] أي: وقت إدبارها من آخر الليل (रात समाप्त हुने समय) । यसबाट अभिप्राय फज्रका दुई रकाअत सुन्नतहरु हुन् । ऐच्छिक नमाज़हरुमा नबी सल्लल्लाहु अलैहि व सल्लमले यसको अत्याधिक ध्यान राख्नुहुन्थ्यो । तथा एक हदीसमा उहाँ सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो कि फज्रको दुई (रकाअत) सुन्नतहरु संसार तथा त्यसका प्रत्येक कुरोभन्दा उत्तम छ (सहीह बुख़ारी, किताबुत तहज्जुद, बाबु तआहुदे रक्अतयिल् फज्र व मन सम्माहुमा ततौउअन् मुस्लिम किताबुस् सलाति, बाबु इस्तिहबाबे रकअतयिल फ़ज्र)

*यो प्रथम सूर: हो जसलाई रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमले पूरा काफ़िरहरुका जनसमूहमा सुनाउनु भयो । यसका पश्चात जति मानिस उहाँका पछाडी थिए सबैले सजदा गरे, उमैया बिन खलफका अतिरिक्त, उसले आफ्नो मुट्ठीमा माटो लिएर त्यसमाथि सजदा गऱ्यो । अन्ततः त्यो कुफ्रकै दशामा मारियो । (सहीह बुख़ारी, व्याख्या सूर: नज्म) आदरणीय ज़ैद बिन साबित भन्नुहुन्छ कि मैले यस सूर:को पाठ उहाँका सामु गरे त उहाँले यसमा सजदा गर्नुभएन । (सहीह बुख़ारी, उपरोक्त बाब) यसको अभिप्राय यो भयो कि सजदा गर्नु मुस्तहब (राम्रो) छ, अनिवार्य छैन । कहिले छोडि पनि दिइयोस् त ज़ायज (उचित) छ ।

وَالنَّجْمِ إِذَا هَوَىٰ ①

(१) सौगन्ध छ ताराको जब तल आओस्।[1]

مَا ضَلَّ صَاحِبُكُمْ وَمَا غَوَىٰ ②

(२) कि तिम्रो साथीले न मार्ग गुमाएको छ न त्यो बक्र मार्गमा छ।[2]

وَمَا يَنْطِقُ عَنِ الْهَوَىٰ ③

(३) तथा न उनी आफ्नो इच्छाले कुनै कुरा भन्दछन्।

إِنْ هُوَ إِلَّا وَحْيٌ يُوحَىٰ ④

(४) त्यो त केवल प्रकाशना (आकाशवाणी) हो जो अवतरित गरिन्छ।[3]

عَلَّمَهُ شَدِيدُ الْقُوَىٰ ⑤

(५) त्यसलाई पूर्ण शक्ति भएको फरिश्ताले सिकाएको छ।

ذُو مِرَّةٍ فَاسْتَوَىٰ ⑥

(६) जो शक्तिशाली छ,[4] अनि त्यो सीधा उभिहाल्यो।

---

[1]केही भाष्यकारहरुले तारासित सुरैया (कृतिका नक्षत्र) अभिप्राय लिएका छन् तथा केहीले जोहरा तारा लिएका छन्, तथा केही अन्य विद्वानहरुले साधारण तारा लिएका छन्। هَوَىٰ (हवा) माथिदेखि तल झर्नु अर्थात् जब रात्रिका अन्तमा फज्रको समय त्यो खस्छ, अथवा शैतानहरुलाई हान्नका लागि खस्दछ, अथवा केही ज्ञाताहरुका अनुसार प्रलयको दिन खस्नेछन्।

[2]यो सौगन्धको उत्तर हो। صَاحِبُكُمْ (तिम्रो साथी) भनेर नबी सल्लल्लाहु अलैहि व सल्लमको सत्यतालाई स्पष्ट गरिएको छ कि नबूअत (दूतत्व) भन्दा पहिला उसले चालीस वर्ष तिम्रा बीच गुजारेका छन्। त्यसका रात-दिनका सबै कर्म तिम्रा बीच गुजारेका छन्। त्यसका रात-दिनका सबै कर्म तिम्रा सामु छन्। त्यसको स्वभाव तथा कर्म तिमीले जानेबुझेको कुरा हो। सच्चाई तथा अमानतदारीका अतिरिक्त त्यसका आचरणमा तिमीले केही अरु पनि देखेका छौ ? अब चालीस वर्ष पश्चात जो त्यसै नबूअतको दावा गर्दछ त अलिकति सोच कि त्यो कसरी झूठो हुनसक्छ ? वास्तवमा न त्यो पथभ्रष्ट भएको छ न बहकेको छ। अल्लाहले दुवै प्रकारको गुमराहीहरुबाट आफ्ना पैगम्बरको वर्णन गरेको छ।

[3]त्यो कुमार्ग तथा बहकन कसरी सक्दछ ? त्यो त अल्लाहको प्रकाशना बिना मुख नै खोल्दैन यहाँसम्मकि हाँसो-ख्यालका समयमा पनि उहाँका मुखबाट सत्यबाहेक केही निस्कन्नथ्यो। (तिर्मिजी अबवाबुल बिर्र, बाबु माजाअ फ़िल मज़ाहे) यसैप्रकार क्रोधको स्थितिमा पनि उहाँलाई आफ्नो मनोभावनामाथि यति नियन्त्रण थियो कि उहाँका मुखबाट कुनै कुरा यथार्थका विपरीत निस्कँदैनथ्यो। (अबू दाऊद, किताबुल इलम, बाबुन फ़ि किताबिल इल्मे)

[4]यसबाट अभिप्राय जिब्रील फरिश्ता हो जो बलवान तथा अत्याधिक शक्तिशाली छ। पैग़म्बरमाथि प्रकाशना ल्याउने तथा उसलाई शिक्षा दिने यही फरिश्ता हो।

وَهُوَ بِالْأُفُقِ الْأَعْلَىٰ ⑦

(७) तथा त्यो उनका आकाशका किनाराहरु (क्षितिज) मा थियो ।[1]

ثُمَّ دَنَا فَتَدَلَّىٰ ⑧

(८) अनि निकट भयो तथा उत्तर आयो ।[2]

فَكَانَ قَابَ قَوْسَيْنِ أَوْ أَدْنَىٰ ⑨

(९) त त्यो दुई कमानका बराबरका दूरीमा रहयो, बरु त्यसभन्दा पनि कम ।[3]

فَأَوْحَىٰ إِلَىٰ عَبْدِهِ مَا أَوْحَىٰ ⑩

(१०) त उसले अल्लाहका भक्तलाई सन्देश पुऱ्यायो[4] जो पनि पुऱ्यायो ।

مَا كَذَبَ الْفُؤَادُ مَا رَأَىٰ ⑪

(११) हृदयले झूठ भनेन जसलाई (सन्देष्टाले) देख्यो ।[5]

[1]अर्थात् जिब्रील अलैहिस्सलाम, अर्थात प्रकाशना (वह्य) सिकाउनका पश्चात आकाशका किनाराहरुमा गई उभे ।

[2]अर्थात् फेरि धर्तीमा उत्रे तथा विस्तारै नबी सल्लल्लाहु अलैहि वसल्लमका समीप पुगे ।

[3]केही विद्वानहरुले यो अनुवाद गरेका छन् दुई हातहरुका बराबर । यो नबी सल्लल्लाहु अलैहि व सल्लम तथा जिब्रील अलैहिस्सलामको परस्पर समीपताको वर्णन हो । अल्लाह तआला तथा नबी सल्लल्लाहु अलैहि व सल्लमको निकटताको वर्णन होइन, जस्तो कि केही धर्मविज्ञहरुले विश्वास दिलाउँछन् । आयतका पूर्वक्रमबाट पूर्णरुपमा स्पष्ट छ कि यसमा मात्र जिब्रील तथा पैगम्बरको चर्चा छ । यसै निकटताका अवसरमा नबी सल्लल्लाहु अलैहि व सल्लमले जिब्रीललाई उनका मूल रुपमा देख्नु हो । तथा यो नबी हुनुका आरम्भिक युगको घटना हो जसको चर्चा यी आयतहरुमा गरियो । दोस्रो पटक मूल रुपमा मेराज (आकाश-भ्रमण) को रातिमा देख्नु हो ।

[4]अर्थात् जिब्रील अलैहिस्सलाम अल्लाहका भक्त मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमका लागि जो प्रकाशना अथवा सन्देश लिएर आएका थिए, त्यो उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) सम्म पुऱ्याए ।

[5]अर्थात् नबी सल्लल्लाहु अलैहि व सल्लमले जिब्रीललाई वास्तविक रुपमा देखे कि उनका ६ सय पंख छन् । एउटा पंख पश्चिम तथा पूर्वका बीच दूरीका बराबर थियो । यसलाई उहाँ सल्लल्लाहु अलैहि व सल्लमका हृदयले झुठ्लाएन बरु अल्लाहको यस महान शक्तिलाई स्वीकार गऱ्यो ।

أَفَتُمَٰرُونَهُۥ عَلَىٰ مَا يَرَىٰ ﴿١٢﴾

(१२) के तिमी झगडा गर्दछौ त्यसमाथि जो (पैग़म्बर-सन्देष्टा) ले देख्नुहुन्छ।

وَلَقَدْ رَءَاهُ نَزْلَةً أُخْرَىٰ ﴿١٣﴾

(१३) त्यसलाई त एक पटक अरु पनि देख्नु भएको थियो।

عِندَ سِدْرَةِ ٱلْمُنتَهَىٰ ﴿١٤﴾

(१४) सिदरतुल मुन्तहाका निकट।[1]

عِندَهَا جَنَّةُ ٱلْمَأْوَىٰٓ ﴿١٥﴾

(१५) त्यसैका निकट जन्नतुल मावा छ।[2]

إِذْ يَغْشَى ٱلسِّدْرَةَ مَا يَغْشَىٰ ﴿١٦﴾

(१६) जबकि सिदरहलाई लुकाइराखेको थियो। त्यो वस्तु जो त्यसमाथि छाइराखेको थियो।[3]

مَا زَاغَ ٱلْبَصَرُ وَمَا طَغَىٰ ﴿١٧﴾

(१७) न त दृष्टि बहक्यो, न सीमाभन्दा बढ्यो।[4]

لَقَدْ رَأَىٰ مِنْ ءَايَٰتِ رَبِّهِ ٱلْكُبْرَىٰٓ ﴿١٨﴾

(१८) निश्चय उसले आफ्ना प्रभुका ठूला-ठूला निशानीहरुभन्दा केही निशानीहरु देखिहाल्यो।[5]

[1]यो मेराजको रातमा जब जिब्रीललाई वास्तविक रुपमा देख्नुभयो, त्यसको वर्णन हो। यो सिद्रतुल मुन्तहा एउटा बयरको वृक्ष हो, जो छैठौं अथवा सातौं आकाशमा तथा यो अन्तिम सीमा हो। त्यसभन्दा माथि कोही फरिश्ता जान सक्दैन। फरिश्ताहरु अल्लाहका आदेश पनि यहींबाट प्राप्त गर्दछन्।

[2]यसलाई "जन्नतुल मावा" यसकारण भन्दछन् कि आदम अलैहिस्सलामको आवास तथा निवास यहीं थियो। केही ज्ञाताहरु भन्दछन् कि आत्माहरु यहीं आएर एकत्र हुन्छन्।

[3]यो सिद्रतुल मुन्तहाको त्यस स्थितिको वर्णन हो जब मेराजको राति उहाँले त्यसलाई देख्नुभयो। सुनका पतिङ्गा (भुसुनाहरु) त्यसका आसपास घुमिराखेका थिए। फरिश्ताहरुको प्रतिबिम्ब त्यसमाथि परिराखेको थियो, तथा प्रभुका प्रतापहरुको प्रदर्शन पनि त्यहीं थियो। (इब्ने कसीर आदि) यसै स्थानमा नबी सल्लल्लाहु अलैहि व सल्लमलाई तीन वरदानहरुबाट सम्मानित गरियो। पाँच समयका नमाज़हरु, सूर: बक़र:का अन्तिम आयतहरु, तथा त्यस मुसलमानको क्षमाको बाचा जो शिर्कका दोषहरुबाट पवित्र हुनेछ। (सहीह मुस्लिम, किताबुल ईमान, बाबु ज़िक्रे सिदरतिल मुन्तहा)

[4]अर्थात् नबी सल्लल्लाहु अलैहि व सल्लमका निगाहहरु दायाँ-बायाँ भएनन्, न त्यस सीमाभन्दा उच्च तथा पारी गइन् जो उहाँका लागि निर्धारित गरिएको थियो। (ऐसरूत्तफ़ासीर)

[5]जसमा जिब्रील अलैहिस्सलाम तथा सिद्रतुल मुन्तहालाई देख्नु तथा अन्य प्राकृतिका प्रतीकहरुको दर्शन छ जसको केही विवरण मेराजका हदीसहरुमा वर्णित छ।

أَفَرَءَيْتُمُ اللَّٰتَ وَالْعُزَّىٰ ﴿١٩﴾

(१९) के तिमीले लात तथा उज्ज़ालाई देख्यौ ।

وَمَنَوٰةَ الثَّالِثَةَ الْأُخْرَىٰ ﴿٢٠﴾

(२०) तथा तेस्रो अन्तिम मनातलाई ।[1]

[1]यो मुश्रिकीन (बहुदेववादीहरुं) लाई झपार्नका लागि भनिंदैछ कि अल्लाह त त्यो हो जसले जिब्रील अलैहिस्सलाम जस्ता महान फरिश्ताहरुलाई पैदा गऱ्यो । मुहम्मद रसूलुल्लाह सल्ल्लाहु अलैहि व सल्लम जस्ता त्यसका सन्देशवाहक (रसूल) हुनुहुन्छ, जसलाई उसले आकाशहरुमा बोलाएर आफ्ना ठूला-ठूला निशानीहरुको दर्शन पनि गरायो तथा उनीमाथि प्रकाशना पनि उतार्दछ । के तिमीले जुन पूज्यहरुको उपासना गर्दछौ उनमा पनि यो अथवा यसप्रकारका गुण छन् ? यस सन्दर्भमा अरबका तीन मुख्य देवताहरुका नाम लियो । 'लात' केही ज्ञाताहरुका निकट यो शब्द अल्लाहका नामबाट लिइएको छ । केही अन्यका विचारमा 'लात' 'यलीत' बाट छ, जसको अर्थ मोड्नु (बङ्ग्याउनु) हो । पूजारी उसतिर आफ्ना गर्दनहरु मोड्दथे तथा त्यसको परिक्रमा गर्दथे, यसकारण यो नाम पऱ्यो । केही अन्य भन्दछन् कि लातमा 'त' अक्षर संयुक्त छ । यो لَتَّ يَلُتُّ बाट कर्ता संज्ञा छ अर्थात् (सातु घोल्नेवाला) । यो एउटा सदाचारी व्यक्ति थियो, जसले हाजिहरुलाई घोलेर सातु पिलाउने गर्दथ्यो । जब यो मरिहाल्यो त मानिसहरुलाई त्यसको समाधिलाई पूजास्थल बनाइहाले, अनि त्यसको प्रतिमा तथा मूर्ति बन्यो । यो तायेफमा बनू सकीफको सबभन्दा ठूलो देवता थियो । عُزَّىٰ (उज्जा) भन्दछन् कि यो अल्लाहका सगुण नाम عَزِيزٌ (अज़ीज़) बाट लिइएको छ, तथा यो أَعَزُّ (अअज़्ज़) का स्त्रीलिङ्ग हो عَزِيزَةٌ (अज़ीज़ह) का अर्थमा छ । केही विद्वानहरु भन्छन् कि यो गत्फानमा एउटा वृक्ष थियो, जसको पूजा गरिन्थ्यो । केही अन्य भन्दछन् कि यो श्वेत पत्थर थियो जसलाई पूज्दथे । यो कुरैश तथा बनू कनानाको विशेष देवता थियो । مَنَاةٌ (मनात) मना, यमनीबाट छ जसको अर्थ 'बहाना' हो । यसको निकटता प्राप्त गर्नका लागि मानिस त्यसका पासमा पशुहरुको अत्याधिक बलि दिने गर्दथे तथा तिनका रगत बगाउँथे । यो मक्का तथा मदीनाका मध्ये एउटा बुत (देवता) थियो । (फ़तहुल क़दीर) यो कुदैदको अगाडी मुशल्ललको ठाउँमा थियो । बनू खुजाआको यो विशेष देवता थियो । अन्धकार (अज्ञान) युगमा औस तथा ख़ज़रजका मानिस यहींबाट एहराम बाँध्थे तथा यस देवताको परिक्रमा पनि गर्दथे । (ऐसरूत्तफ़ासीर) यसका अतिरिक्त विभिन्न क्षेत्रहरुमा मूर्तिहरु फैलिएका थिए । नबी सल्लल्लाहु अलैहि व सल्लमले मक्का विजयका पश्चात तथा अन्य अवसरहरुमा ती बूतहरु तथा अन्य मूर्तिहरुलाई विध्वस्त गराइदिनु भयो । त्यसमाथि बनेका कलशहरु एवं भवनहरुलाई धराशायी गरिदिनु भयो । वृक्षहरुलाई काट्न लगाउनु हो जसको पूजा एवं सम्मान गरिन्थ्यो, तथा ती सबै अवशेष तथा स्मारकहरुलाई मेटाइदिनु भयो जो मूर्तिपूजाको यादगार थिए । यस कार्यका लागि उहाँले आदरणीय खालिद बिन वलीद, आदरणीय अली, आदरणीय अम्र बिन आस तथा जरीर पुत्र अब्दुल्लाह अलबजली आदि (अल्लाह यी सबैसित प्रसन्न होस्) लाई, जहाँ-जहाँ यी मूर्तिहरु थिए, पठाउनुभयो, तथा उनीहरुले गएर ती सबैलाई ध्वस्त पारी अबर द्वीपबाट शिर्कको नाम मेटाइदिए । (इब्ने कसीर) इस्लामका प्रथम युगका धेरै समय पश्चात एक पटक पुनः अरबमा यो शिर्कका प्रदर्शन सामान्य भएका थिए ।

أَلَكُمُ الذَّكَرُ وَلَهُ الْأُنْثَىٰ ﴿٢١﴾

(२१) के तिम्रा लागि पुत्र तथा त्यस (अल्लाह) का लागि पुत्रीहरु छन् ?[1]

تِلْكَ إِذًا قِسْمَةٌ ضِيزَىٰ ﴿٢٢﴾

(२२) यो त अब अत्यन्त अन्यायको विभाजन हो ।

إِنْ هِيَ إِلَّا أَسْمَاءٌ سَمَّيْتُمُوهَا أَنْتُمْ وَآبَاؤُكُمْ مَا أَنْزَلَ اللَّهُ بِهَا مِنْ سُلْطَانٍ ۚ إِنْ يَتَّبِعُونَ إِلَّا الظَّنَّ وَمَا تَهْوَى الْأَنْفُسُ ۖ وَلَقَدْ جَاءَهُمْ مِنْ رَبِّهِمُ الْهُدَىٰ ﴿٢٣﴾

(२३) वास्तवमा यी केवल नाम हुन् जो तिमीले तथा तिम्रा पूर्वजहरुले उनका राखिहालेका छन्, अल्लाहले उनको कुनै प्रमाण उतारेन । यी मानिस त केवल अड्कल तथा आफ्ना मनोकांक्षाहरुका पछाडी परेका छन्, तथा निःसन्देह उनका प्रभुको तर्फबाट उनका पास मार्गदर्शन आइसकेको छ ।

أَمْ لِلْإِنْسَانِ مَا تَمَنَّىٰ ﴿٢٤﴾

(२४) के प्रत्येक व्यक्ति जो कामना गर्दछ त्यसलाई सुलभ छ ?[3]

فَلِلَّهِ الْآخِرَةُ وَالْأُولَىٰ ﴿٢٥﴾

(२५) अल्लाहकै लागि यो लोप तथा त्यो लोप ।[4]

---

जसका लागि अल्लाह तआलाले मुहम्मद बिन अब्दुल वहाबलाई यो प्रोत्साहन दिइयो कि उनले दरईयाको अधिकारीलाई मिलाएर यी शिर्कका प्रतीकहरुलाई निरस्त गरिदिए, तथा यसैको नवीकरण एकपटक फेरि नज्द तथा हिजाजका शासक सुल्तान अब्दुल अजीज़ (वर्तमान सऊदी शासकहरुका पिता तथा यस राज्यका निर्माता) ले गरे । सबै पक्का कबरहरु तथा कलशहरुलाई ध्वस्त गरी नबी सल्लल्लाहु अलैहि व सल्लमको सुन्नत (विधान) लाई प्रचलित गरे तथा यसप्रकार (अल्लाहका अनुग्रह) बाट अब पूरै सऊदी अरबमा इस्लामी विधान अनुसार न कुनै पक्का समाधि छ, न कब्र र न कुनै मज़ार ।

[1]मुश्रिकीन मक्का फरिश्ताहरुलाई अल्लाहका पुत्रीहरु भन्थे, जस्तो कि यो विषय अनेक स्थानमा गुज्रिसकेको छ ।

[2] ضِيزَىٰ (ज़ीज़ा) सत्य तथा तथ्यबाट हटेको ।

[3]अर्थात् यी जे चाहन्छन् कि उनका यी देवता उनलाई लाभ पुर्याउन तथा उनको सिफारिश (अभिस्तावना) गरून् यो सम्भव नै छैन ।

[4]अर्थात् त्यही हुनेछ जो त्यसले चाहनेछ, किनकि सबै अधिकार उसैको हातमा छ ।

وَكَمْ مِّنْ مَّلَكٍ فِى السَّمٰوٰتِ لَا تُغْنِىْ شَفَاعَتُهُمْ شَيْـًٔا اِلَّا مِنْۢ بَعْدِ اَنْ يَّاْذَنَ اللّٰهُ لِمَنْ يَّشَآءُ وَيَرْضٰى ﴿٢٦﴾

(२६) तथा धेरै फरिश्ताहरु आकाशहरुमा छन् जसका सिफारिश कुनै लाभ दिन सक्दैन, परन्तु यो अन्य कुरा हो कि अल्लाह (तआला) ले आफ्नो इच्छाबाट तथा आफ्नो प्रसन्नताले जसलाई चाहन्छ आज्ञा दिदेओस् ।[1]

اِنَّ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ لَيُسَمُّوْنَ الْمَلٰٓئِكَةَ تَسْمِيَةَ الْاُنْثٰى ﴿٢٧﴾

(२७) निःसन्देह जो मानिस आख़िरत (परलोक) मा ईमान स्वीकार गर्दैनन्, उनीहरु फरिश्ताहरुलाई देवीहरुको संज्ञा दिन्छन् ।

وَمَا لَهُمْ بِهٖ مِنْ عِلْمٍ ؕ اِنْ يَّتَّبِعُوْنَ اِلَّا الظَّنَّ ۚ وَاِنَّ الظَّنَّ لَا يُغْنِىْ مِنَ الْحَقِّ شَيْـًٔا ﴿٢٨﴾

(२८) यद्यपि उनीहरुलाई यसको कुनै ज्ञान छैन, उनी केवल आफ्ना अनुमानका पछाडी परेका छन् तथा निःसन्देह आभास (एवं अनुमान) सत्यका सापेक्ष कुन काम दिंदैन ।

فَاَعْرِضْ عَنْ مَّنْ تَوَلّٰى ۙ عَنْ ذِكْرِنَا وَلَمْ يُرِدْ اِلَّا الْحَيٰوةَ الدُّنْيَا ﴿٢٩﴾

(२९) त तपाईं त्यसबाट मुख फर्काइहाल्नुस् जो हाम्रो यादबाट मुख फर्काउँछ तथा जसको उद्देश्य केवल सांसारिक जीवनका अन्य केही नहोस् ।

ذٰلِكَ مَبْلَغُهُمْ مِّنَ الْعِلْمِ ؕ اِنَّ رَبَّكَ هُوَ اَعْلَمُ بِمَنْ ضَلَّ عَنْ سَبِيْلِهٖ ۙ وَهُوَ اَعْلَمُ بِمَنِ اهْتَدٰى ﴿٣٠﴾

(३०) यही उनका ज्ञानको सीमा हो । तपाईंको प्रभु त्यससित राम्ररी परिचित छ जो त्यसका मार्गबाट विचलित भइसकेको छ तथा त्यही राम्ररी परिचित छ, त्यससित पनि जो सन्मार्ग प्राप्त छ ।

وَلِلّٰهِ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ ۙ لِيَجْزِىَ الَّذِيْنَ

(३१) तथा अल्लाहकै हो जे-जति आकाशहरुमा छ तथा जे-जति धर्तीमा छ।



[1]अर्थात् फरिश्ताहरु जो अल्लाहका निकटतम सृष्टि हुन्, उनलाई पनि सिफारिशको अधिकार केवल तिनै मानिसहरुका लागि प्राप्त हुनेछ जसका लागि अल्लाहले रुचाउनेछ । जब यो कुरो छ त त्यसपछि यो पत्थरका मूर्तिहरुले कसरी सिफारिश गर्नेछन्, जसबाट तिमीले आशा लगाएर बसेका छौ ? अनि अल्लाह मुशरिकहरु (मिश्रणवादीहरु) का लागि कसैलाई सिफारिश गर्नुको अधिकार नै कहाँ दिनेछ जबकि शिर्क त्यसकहाँ अक्षम्य छ, जसलाई त्यो कदापि क्षमा गर्नेछैन ?

اَسَآءُوۡا بِمَا عَمِلُوۡا وَيَجۡزِىَ الَّذِيۡنَ اَحۡسَنُوۡا بِالۡحُسۡنٰى ۚ﴿۳۱﴾

ताकि त्यसले (अल्लाह तआ़लाले) कुकर्मीहरुलाई उनका कर्महरुको प्रतिकूल देओस् तथा सत्कर्मीहरुलाई राम्रो प्रतिफल प्रदान गरोस् ।[1]

اَلَّذِيۡنَ يَجۡتَنِبُوۡنَ كَبٰٓئِرَ الۡاِثۡمِ وَالۡفَوَاحِشَ اِلَّا اللَّمَمَ ؕ اِنَّ رَبَّكَ

(३२) ती मानिसहरुलाई जो महापापहरुबाट बच्छन् तथा निर्लज्जताबाट पनि[2] कुनै साना पापहरुका अतिरिक्त ।[3] निःसन्देह तिम्रो प्रभु उदार क्षमाशील

[1]अर्थात् मार्गदर्शन तथा पथभ्रष्ट गर्नु उसैका हातमा छ । त्यसले जसलाई चाहन्छ मार्गदर्शन दिन्छ तथा जसलाई चाहन्छ विचलनका खाल्डोमा हालिदिन्छ, ताकि सदाचारीहरुलाई उनका सत्कर्महरुको फल तथा दुराचारीहरुलाई उनका कुकर्महरुको प्रतिकार देओस् । ﴿وَلِلَّهِ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ﴾ यो मध्यवर्ती वाक्य हो, तथा لِيَجْزِيَ को सम्बन्ध विगत कथनसित छ । (फ़तहुल क़दीर)

[2]كَبَائِرُ (कबायेर) كَبِيرَةٌ (कबीरह) को बहुवचन हो । महापापको परिभाषामा मतभेद छ । अधिकतर धर्मज्ञानीहरुका निकट प्रत्येक त्यो पाप महापाप हो जसमाथि नरकको चेतावनी छ अथवा जसलाई गर्नुमा कडा निन्दा क़ुरआन तथा हदीसमा गरिएको छ, तथा धर्मज्ञानी यो पनि भन्दछन् कि साना पाप पनि पटक-पटक रित्त यसका अर्थ तथा गुणमा मतभेदका समान नै त्यसको संख्यामा पनि ठूलो मतभेद छ । केही विद्वानहरुले उनलाई पुस्तकहरुमा एकत्र गरिदिएका छन्, जस्तै इमाम ज़हबीको "किताबुल क़बायेर" तथा "अज्-ज़वाजिर" आदि । فَوَاحِشُ (फ़वाहिश) فَاحِشَةٌ को बहुवचन हो, निर्लज्जतामा आधारित कर्म, जस्तै व्यभिचार, बाल-मैथुन आदि । केही ज्ञानीहरु भन्छन् कि जुन पापहरुमा दण्ड निर्धारित छ ती सबै फ़वाहिश हुन् । आजकल निर्लज्जताका प्रदर्शन निकै सामान्य बनिहालेका छन् यसैकारण निर्लज्जतालाई सभ्यता ठानिएको छ, यहाँसम्मकि अब मुसलामानहरुले पनि यस लज्जाहीन सभ्यतालाई अपनाइहालेका छन् । जस्तो कि घरहरुमा टी.भी., भी.सी.आर. आदि व्याप्त छन् । नारीहरुले न केवल पर्दाहरुको त्याग गरिदिएका छन्, बरु सिंगार-पटार गरी तथा सौन्दर्य एवं शोभाको विज्ञापन बनेर बाहिर निस्कनलाई आफ्ना आचरण बनाइहालेका छन् । मिश्रित शिक्षा, मिश्रित संस्था एवं सभाहरु तथा अन्य धेरै अवसरमा नर-नारीहरुको बिना संकोच मिश्रण तथा वार्तालाप नित्य दिन बढ्दै गइराखेको छ, जबकि यी सबै फ़वाहिश (निर्लज्जता) का अन्तर्गतमा आउँछन् जसका विषयमा यहाँ भनिदैछ कि मानिसहरुलाई मोक्ष प्राप्त हुनु छ उनीहरु महापापहरु तथा फ़वाहिशबाट बच्दछन्, न कि उनमा लीन हुन्छन् ।

[3]لَمَمٌ (लमम) को शाब्दिक अर्थ हो कम तथा सानो हुनु । यसैबाट यसका प्रयोग छन् أَلَمَّ بِالْمَكَانِ (घरमा अलि बेर बसे), أَلَمَّ بِالطَّعَامِ (अलिकति खाएँ) यसैप्रकार कुनै कुरोलाई स्पष्ट गर्नु अथवा त्यसका समीप हुनु, अथवा कुनै काम एक पटक अथवा दुई पटक

وَاسِعُ الْمَغْفِرَةِ هُوَ أَعْلَمُ بِكُمْ إِذْ أَنْشَأَكُمْ مِّنَ الْأَرْضِ وَإِذْ أَنْتُمْ أَجِنَّةٌ فِي بُطُونِ أُمَّهَاتِكُمْ فَلَا تُزَكُّوا أَنْفُسَكُمْ هُوَ أَعْلَمُ بِمَنِ اتَّقَىٰ ﴿٣٢﴾

छ, त्यो तिमीलाई राम्ररी जान्दछ, जबकि उसले तिमीलाई धर्तीबाट पैदा गऱ्यो तथा जबकि तिमी आफ्ना आमाहरुका गर्भमा भ्रूण थियौ,[1] त तिमी आफ्नो पवित्रता स्वयं वर्णन नगर ।[2] त्यही सदाचारीहरुलाई राम्ररी जान्दछ ।

أَفَرَأَيْتَ الَّذِي تَوَلَّىٰ ﴿٣٣﴾

(३३) के तपाईंले त्यसलाई देख्नुभयो जसले मुख फर्कायो ।

وَأَعْطَىٰ قَلِيلًا وَأَكْدَىٰ ﴿٣٤﴾

(३४) तथा निकै कम दियो एवं हात रोकिहाल्यो ।[3]

أَعِنْدَهُ عِلْمُ الْغَيْبِ فَهُوَ يَرَىٰ ﴿٣٥﴾

(३५) के उसलाई परोक्षको ज्ञान छ कि त्यो (सबैथोक) देखिराखेको छ ?[4]

गर्नु, त्यसलाई नित्य तथा निरन्तर नगर्नु, अथवा केवल मनोगत हुनु, यी सबै रुप لَمَم (लमम) कहलाउँछन् । (फतहुल कदीर) यसका यस अर्थ तथा प्रयोगका आधारमा यसको अर्थ सानो पाप गरिन्छ, जसको अभिप्राय हो महापापका आरम्भिक कर्म गर्नु, किन्तु महापापबाट बच्नु अथवा कुनै पाप एक-दुईपटक गर्नु अनि सदाका लागि त्यसलाई त्यागदिनु अथवा कुनै पापलाई मनमा विचार गर्नु किन्तु व्यवहारिक रुपमा त्यसका समीप नजानु, यो सबै साना पाप हुनेछन्, जो अल्लाह तआला महापापहरुबाट बच्नका कारण क्षमा गरिदिनेछ ।

[1] أَجِنَّةٌ (अजिन्नह) جَنِين (जनीन) को बहुवचन हो जो भ्रूण गर्भका बच्चाहरुलाई भनिन्छ । यसकारण कि यो मानिसहरुका आँखाबाट ओझेल हुन्छ ।

[2]अर्थात् जब उसबाट तिम्रो कुनै स्थिति तथा गतिविधि गुप्त छैन, यहाँसम्मकि जब तिमी माताका गर्भमा थियौ जहाँ कोही तिमीलाई देख्नमा समर्थ थिएन त्यहाँपनि त्यो तिम्रा प्रत्येक अवस्थासित अवगत थियो, त स्वयं पवित्र बन्नुको के आवश्यकता छ ? अभिप्राय यो हो कि यस्ता काम नगर ताकि देखावाबाट तिमी बच ।

[3]अर्थात् अलिकति दिएर हात रोकिहाल्यो अथवा अलिकति आज्ञापालन गऱ्यो, अनि पछि हट्यो । أَكْدَىٰ को मूल अर्थ हो कि धर्ती खन्दा-खन्दा कडा पत्थर आइहालोस् तथा खुदाइ सम्भव नहोस्, अन्तत: त्यसले खन्न छाडिदेओस् । अत: जो कसैलाई केही दिन्छ । परन्तु पूरा नदेओस्, कुनै काम प्रारम्भ गर्दछ परन्तु त्यसलाई अन्त्यसम्म नपुऱ्याओस् ।

[4]अर्थात् के त्यो देखिराखेको छ कि उसले अल्लाहका मार्गमा व्यय गऱ्यो त त्यसको माल समाप्त भइहाल्नेछ ? होइन यो परोक्षको ज्ञान त्यससित छैन । अपितु त्यो खर्च

أَمْ لَمْ يُنَبَّأْ بِمَا فِي صُحُفِ مُوسَىٰ ﴿٣٦﴾

(३६) के उसलाई त्यस कुराको सूचना दिइएन जो मूसा (अलैहिस्सलाम) का ग्रन्थमा थियो ।

وَإِبْرَاهِيمَ الَّذِي وَفَّىٰ ﴿٣٧﴾

(३७) तथा बफादार इब्राहीम (अलैहिस्सलाम) को ग्रन्थमा थियो ?

أَلَّا تَزِرُ وَازِرَةٌ وِزْرَ أُخْرَىٰ ﴿٣٨﴾

(३८) कि कुनै व्यक्तिले कुनै अर्को व्यक्तिको बोझ उठाउने छैन ।

وَأَن لَّيْسَ لِلْإِنسَانِ إِلَّا مَا سَعَىٰ ﴿٣٩﴾

(३९) तथा यो कि प्रत्येक व्यक्तिका लागि केवल त्यही छ जसको प्रयत्न स्वयं उसले गऱ्यो ।[1]

गर्नबाट केवल कन्जुसी, मायामोह तथा परलोकमा अविश्वासका कारण भागिराखेको छ तथा अल्लाहको आज्ञापालन नगर्नुका पनि यही कारण हो ।

[1]अर्थात् जुनप्रकार कोही कुनै अन्यका पापको उत्तरदायी हुनेछैन, यसैप्रकार उसलाई आख़िरतमा फल पनि त्यसै कुराको प्राप्त हुनेछ, जसमा उसले आफ्नो परिश्रम गरेको हुनेछ। (यस प्रतिकारको सम्बन्ध आख़िरतसित छ, संसारसित होइन, जस्तो कि केही कम्युनिष्ट विद्वान यसको यो भावार्थ विश्वस्त गराएर तथा अनुपस्थित जिम्मेदारी तथा केरायादारीलाई अवैध बताउँछन्)। हो यस आयतबाट ती विद्वानहरुको तर्क दिनु सही हो जो भन्दछन् कि कुर्‌आनका पाठको पुण्य मृत व्यक्तिहरुलाई पुग्दैन, यसकारण कि यो त्यस मृतको कर्म होइन, न त्यसको परिश्रम । यसैकारण नबी सल्लल्लाहु अलैहि वसल्लमले आफ्ना अनुयायीहरुलाई मृतहरुका लागि कुर्‌आन पढ्नुको कुनै प्रोत्साहन कथनबाट अथवा संकेतबाट त्यसतिर मार्गदर्शन गर्नु भएन । यस्तै सहाबा किराम रज़िअल्लाहु अन्हुमबाट पनि यो काम सिद्ध छैन। यदि यो कर्म पुण्यको कर्म भए त सहाबा किरामले अवश्य त्यसलाई अपनाउँथे । तथा इबादत एवं पुण्य कर्म हुनका लागि स्पष्ट प्रमाण अनिवार्य छ, यसमा विचार तथा अनुमान चल्न सक्दैन। हो, दुआ-दानको पुण्य मूर्दाहरुलाई अवश्य पुग्दछ। यसमा सबै विद्वान सहमत छन् किनकि धर्म-विधानबाट यो प्रमाणित छ, तथा जो हदीस मरणोपरान्त ती कर्महरुको कर्म जारी रहनुका सन्दर्भमा आउँछ त त्यो वास्तवमा मुनष्यका आफ्ना कर्म हुन्, जो कुनै न कुनै प्रकारले शेष रहन्छ। सन्तानलाई स्वयं नबी सल्लल्लाहु अलैहि वसल्लमले मानिसको आफ्नो कमाई भन्नुभएको छ। (अन्नसाई, किताबुल बुयूअ, बाबुल हस्से अलल कसब) चालूदान, वक़्फ़ (स्थिरदान) का समान मानिसका आफ्नै कर्म छन् । ﴿وَنَكْتُبُ مَا قَدَّمُوا وَآثَارَهُمْ﴾

"तथा हामी लेख्दै जान्छौं ती कर्म पनि जसलाई मानिस अगाडी पठाउँछन् तथा उनका ती कर्म पनि जसलाई पछाडी छाडिजान्छन् ।" (यासीन-१२)

| | |
|---|---|
| (४०) तथा यो कि निःसन्देह त्यसको प्रयत्न शीघ्र देखिनेछ ।[1] | وَأَنَّ سَعْيَهُۥ سَوْفَ يُرَىٰ ۝٤٠ |
| (४१) अनि त्यसलाई पूरा-पूरा प्रतिफल दिइनेछ । | ثُمَّ يُجْزَىٰهُ ٱلْجَزَآءَ ٱلْأَوْفَىٰ ۝٤١ |
| (४२) तथा यो कि तपाईंका प्रभुतिरै पुग्नुछ । | وَأَنَّ إِلَىٰ رَبِّكَ ٱلْمُنتَهَىٰ ۝٤٢ |
| (४३) तथा यो कि त्यसैले हसाउँछ त्यसैले रुवाउँछ । | وَأَنَّهُۥ هُوَ أَضْحَكَ وَأَبْكَىٰ ۝٤٣ |
| (४४) तथा यो कि त्यसैले मार्दछ तथा त्यसलै जीवित गर्दछ । | وَأَنَّهُۥ هُوَ أَمَاتَ وَأَحْيَا ۝٤٤ |
| (४५) तथा यो कि उसैले जोडी अर्थात् भाले-पोथी पैदा गरेको छ । | وَأَنَّهُۥ خَلَقَ ٱلزَّوْجَيْنِ ٱلذَّكَرَ وَٱلْأُنثَىٰ ۝٤٥ |
| (४६) वीर्यबाट जबकि त्यो चुहाइन्छ । | مِن نُّطْفَةٍ إِذَا تُمْنَىٰ ۝٤٦ |
| (४७) तथा यो कि पुनः जीवित गर्नु उसैको दायित्व हो । | وَأَنَّ عَلَيْهِ ٱلنَّشْأَةَ ٱلْأُخْرَىٰ ۝٤٧ |
| (४८) तथा यो कि त्यसैले धनवान बनाउँछ तथा धन दिन्छ ।[2] | وَأَنَّهُۥ هُوَ أَغْنَىٰ وَأَقْنَىٰ ۝٤٨ |

यसैप्रकार त्यो ज्ञान जसको उसले मानिसहरुमा प्रचार-प्रसार गऱ्यो तथा मानिसहरुले त्यसको अनुगमन गरे यो उसको प्रयास तथा कर्म हो तथा नबी सल्लल्लाहु अलैहि वसल्लमको हदीस

«مَنْ دَعَا إِلَى هُدًى، كَانَ لَهُ مِنَ الأَجْرِ مِثْلَ أُجُورِ مَنْ تَبِعَهُ، مِن غَيرِ أَنْ يُنْقِصَ مِنْ أُجُورِهِمْ شَيْئًا»

"जसले कुनै राम्रो कुराको मार्गदर्शन गऱ्यो त त्यसका लागि त्यत्तिकै पारिश्रमिक छ जति कि गर्नेलाई बिना कुनै कमी नभईकन ।"(अबू दाऊद किताबुस्सुन्नह, बाबु लुजूमिस्सुन्नह) का अनुसार अनुगामीहरुको फल पनि त्यसलाई पुगिरहनेछ । अतः यो हदीस आयतका प्रतिकूल छैन । (इब्ने कसीर)

[1]अर्थात् उसले संसारमा राम्रो वा नराम्रो जे-जति पनि गऱ्यो, गुप्त वा प्रत्यक्षरुपले गऱ्यो, क़ेयामतका दिन अगाडी आउनेछ तथा त्यसमा उसलाई पूरा प्रतिफल दिइनेछ ।

[2]अर्थात् कसैलाई यति धन दिन्छ कि त्यसलाई कसैको आवश्यकता हुँदैन तथा त्यसका सबै आवश्यकताहरु पूरा हुन जान्छन् । कसैलाई यति धन दिइदिन्छ कि त्यसका पासमा आवश्यकताभन्दा अधिक बच्न जान्छ तथा त्यसलाई एकत्र गरेर राख्छ ।

وَاَنَّهٗ هُوَ رَبُّ الشِّعْرٰى ۙ﴿٤٩﴾

(४९) तथा यो कि त्यही शेअ्रा (तारा) को प्रभु हो ।[1]

وَاَنَّهٗۤ اَهْلَكَ عَادَا ۨالْاُوْلٰى ۙ﴿٥٠﴾

(५०) तथा यो कि उसैले प्रथम आदलाई नष्ट गरेको छ ।[2]

وَثَمُوْدَا۠ فَمَاۤ اَبْقٰى ۙ﴿٥١﴾

(५१) तथा समूदलाई पनि (जसमध्ये) एउटालाई पनि शेष राखेन ।

وَقَوْمَ نُوْحٍ مِّنْ قَبْلُ ؕ اِنَّهُمْ كَانُوْا هُمْ اَظْلَمَ وَاَطْغٰى ؕ﴿٥٢﴾

(५२) तथा त्यसभन्दा पूर्व नूहका समुदायलाई, निःसन्देह उनी अत्यन्त अत्याचारी एवं उद्दण्ड थिए ।

وَالْمُؤْتَفِكَةَ اَهْوٰى ۙ﴿٥٣﴾

(५३) तथा मूतफ़िका (नगर) अथवा उल्टिएका वस्तीहरुलाई) उसैले उल्टाइदियो ।[3]

فَغَشّٰىهَا مَا غَشّٰى ۚ﴿٥٤﴾

(५४) अनि त्यसमाथि छाइदियो जे छाइदियो ।[4]

فَبِاَىِّ اٰلَآءِ رَبِّكَ تَتَمَارٰى ﴿٥٥﴾

(५५) तसर्थ हे मनुष्य ! तिमी आफ्ना प्रभुका कुन-कुन उपहारमा झगड्नेछौ ?[5]

هٰذَا نَذِيْرٌ مِّنَ النُّذُرِ الْاُوْلٰى ﴿٥٦﴾

(५६) यो (नबी) तर्साउनेवाला हुन् पूर्वका तर्साउनेहरु मध्येबाट ।

---

[1]पालनकर्ता त त्यो प्रत्येक वस्तुको हो । यहाँ यस ताराको नाम यसकारण लिएको छ कि अरबका केही क़बीलाहरु त्यसको उपासना गर्दथे ।

[2]आद जातिलाई أولى (प्रथम) यसकारण भनिएको छ कि यो समूद जातिभन्दा पहिला भयो । अथवा यसकारण कि नूहको जातिका पश्चात सर्वप्रथम यो जाति नष्ट गरियो । केही विद्वानहरु भन्छन् कि आद नाम गरेका दुई जातिहरु गुज्रेका छन्, यो प्रथम हो जसलाई प्रचण्ड वायुबाट ध्वस्त गरियो । जबकि दोस्रो कालचक्रहरुका साथ विभिन्न नामहरुबाट चल्यो तथा टूट्दै शेष रहयो ।

[3]यसबाट तात्पर्य आदरणीय लूत अलैहिस्सलामका वस्तीहरु हुन्, जसलाई उनीमाथि पल्टाइयो ।

[4]अर्थात् तत्पश्चात उनीमाथि पत्थरहरुको वर्षा भयो ।

[5]अथवा सन्देह गर्नेछ तथा उनलाई झुठ्लाउनेछ, जबकि उनी यति स्पष्ट तथा सामान्य छन् कि उनको इन्कार सम्भव छैन न उनको लुकाउने कुरो ।

أَزِفَتِ الْآزِفَةُ ﴿٥٧﴾

(५७) आउने समय निकट आइसकेको छ ।

لَيْسَ لَهَا مِن دُونِ اللَّهِ كَاشِفَةٌ ﴿٥٨﴾

(५८) अल्लाहका अतिरिक्त त्यसको (निर्धारित समयमा खोल) देखाउने अन्य कोही छैन ।

أَفَمِنْ هَٰذَا الْحَدِيثِ تَعْجَبُونَ ﴿٥٩﴾

(५९) त के तिमी यस कुरामा आश्चर्य गर्दछौ ?[1]

وَتَضْحَكُونَ وَلَا تَبْكُونَ ﴿٦٠﴾

(६०) तथा हाँसिराखेका छौ ? रोएका छैनौ ?

وَأَنتُمْ سَامِدُونَ ﴿٦١﴾

(६१) (अपितु) तिमी खेलिराखेका छौ ।

فَاسْجُدُوا لِلَّهِ وَاعْبُدُوا ۩ ﴿٦٢﴾

(६२) अब अल्लाहका समक्ष सजदा गर । (नतमस्तक होउ) तथा (उसैको) इबादत (उपासना) गर ।[2]

## सुरतुल क़मर-५४

سُورَةُ الْقَمَرِ

सूरः क़मर* मक्कामा अवतरित भएको, यसमा पचपन्न आयतहरु एवं तीन रूकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

[1]कुरोसित तात्पर्य पवित्र कुर्आन हो, अर्थात तिमी यसबाट आश्चर्य गर्छौ तथा यसको परिहास गर्दछौ, जबकि यसमा न आश्चर्यको कुरो छ न परिहास एवं झुठ्लाउनुको ।

[2]यी मुशरिकहरु (बहुदेववादीहरु) तथा झुठ्लाउनेवालाहरुको फट्कार (झपार) का लागि आदेश दियो । अर्थात् जब उनको दशा यो छ कि उनी पवित्र कुर्आनलाई मान्नुको साटो त्यसको अवहेलना तथा उपहास गर्दछन् तथा हाम्रा सन्देशवाहकको शिक्षा तथा सदुपदेशको उनीमाथि कुनै प्रभाव भइराखेको छैन त हे मुसलमानहरु ! तिमी अल्लाहका सदनमा झुकेर तथा त्यसको उपासना एवं अनुपालनको प्रदर्शन गरी पवित्र कुर्आनका आदर-सम्मानको प्रयोजन गर । अत: यस आज्ञाका अनुपालनमा नबी सल्लल्लाहु अलैहि व सल्लमले तथा सहाबाले सजदा गर्नुभयो यहाँसम्मकि सभामा उपस्थित काफ़िरहरुले पनि सजदा गरे, जस्तो कि हदीसमा छ ।

*यो पनि ती सूरतहरुमध्ये छ जसलाई रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम ईदको नमाज़मा पढ्ने गर्नुहुन्थ्यो जस्तो कि पहिला वर्णन भइसक्यो ।

| | |
|---|---|
| (१) केयामत निकट आइहाल्यो[१] तथा चन्द्रमा फाट्यो ।[२] | اِقۡتَرَبَتِ السَّاعَةُ وَانۡشَقَّ الۡقَمَرُ ① |
| (२) यिनी यदि कुनै चमत्कार देख्दछन् भने मुख फर्काइहाल्छन् तथा भनिदिन्छन् कि यी पहिलादेखि चलिआएका जादू हुन् ।[३] | وَاِنۡ يَّرَوۡا اٰيَةً يُّعۡرِضُوۡا وَيَقُوۡلُوۡا سِحۡرٌ مُّسۡتَمِرٌّ ② |
| (३) उनीहरुले झुठ्लाए तथा आफ्ना इच्छाहरुको अनुसरण गरे तथा प्रत्येक कार्य निश्चित समयमा नै निर्धारित छ ।[४] | وَكَذَّبُوۡا وَاتَّبَعُوۡۤا اَهۡوَآءَهُمۡ وَكُلُّ اَمۡرٍ مُّسۡتَقِرٌّ ③ |
| (४) नि:सन्देह उनका पासमा ती सूचनाहरु आइसकेका | وَلَقَدۡ جَآءَهُمۡ مِّنَ الۡاَنۡۢبَآءِ |

[१]एक त त्यस समयका अनुसार जो व्यतीत भइहाल्यो, किनकि जो शेष छ त्यो थोरै छ । दोस्रो, प्रत्येक आगामी वस्तु समीप नै छ । जस्तो कि नबी सल्लल्लाहु अलैहि वसल्लमले पनि आफ्ना बारेमा भन्नुभयो कि मेरो अस्तित्व केयामतसित संलग्न छ, अर्थात् मेरो तथा प्रलयका बीच कुनै ईशदूत आउने छैन ।

[२]यो त्यो चमत्कार हो जुन मक्कावासीहरुको माँग पश्चात देखाइयो । चन्द्रमाका दुई टुका भइहाले यहाँसम्मकि मानिसहरुले हिरा पर्वतलाई त्यसका मध्ये देखे, अर्थात् त्यसको एक भाग पर्वतका त्यसतिर तथा एक भाग यसतर्फ भयो । (सहीह बुख़ारी, मनाकिबुल अंसार, बाबु इनशिकाकिल क़मर, मुस्लिम किताबु सिफतिल क़ेयामते, बाबु इन्शिकाक़िल क़मर) सबै पहिला तथा पछिका विद्वानहरुको यही मत छ । (फ़तहुल क़दीर) इमाम इब्ने कसीर लेख्नुहुन्छ । "विद्वानहरुका निकट यस कुरामा सहमति छ कि चन्द्रमा दुई भाग नबी सल्लल्लाहु अलैहि व सल्लमका युगमा भए तथा यो उहाँ सल्लल्लाहु अलैहि व सल्लमका स्पष्ट चमत्कारहरुमध्ये छ, सही वर्णनक्रमबाट प्रमाणित निरन्तर हदीस यसलाई स्पष्ट गर्दछ ।"

[३]अर्थात् कुरैश ईमान स्वीकार गर्नुका साटो यसलाई जादू भनेर आफ्ना इन्कारका बाटामा अडिग रहे ।

[४]यो मक्काका काफ़िरहरुबाट झुठ्लाउनु तथा मनोकांक्षाका अनुसरणको खण्डन गर्नका लागि भन्नुभयो कि प्रत्येक कामको एउटा सीमा तथा अन्त्य छ, त्यो राम्रो होस् अथवा नराम्रो । अर्थात अन्तत: त्यसको परिणाम निस्कने छ, राम्रोको राम्रो तथा नराम्रोको नराम्रो । यो परिणाम लोकमा पनि प्रकट हुनसक्छ यदि अल्लाहको इच्छा हुन्छ, अन्यथा परलोकमा त निश्चित छ ।

مَا فِيهِ مُزْدَجَرٌ ۝

छन्[1] जसमा डाँट-फपार (भएको शिक्षा) छ ।[2]

حِكْمَةٌ بَالِغَةٌ فَمَا تُغْنِ النُّذُرُ ۝

(५) तथा पूर्ण हिक्मतको कुरो छ,[3] परन्तु यी तर्साउने कुराहरुले पनि कुनै लाभ दिएन ।[4]

فَتَوَلَّ عَنْهُمْ يَوْمَ يَدْعُ الدَّاعِ إِلَىٰ شَيْءٍ نُّكُرٍ ۝

(६) (तसर्थ हे नबी !) तिमी उनीहरुबाट मुख फर्काइहाल जुन दिन एउटा पुकार्नेले अप्रिय वस्तुतिर पुकार्नेछ ।[5]

خُشَّعًا أَبْصَارُهُمْ يَخْرُجُونَ مِنَ الْأَجْدَاثِ كَأَنَّهُمْ جَرَادٌ مُّنتَشِرٌ ۝

(७) यी फुकेका आँखाहरुसित चिहानहरुबाट यसप्रकार उभिनेछन् कि जस्तै उनी विस्तृत टिड्डी (सलह) दल हुन् ।[6]

مُّهْطِعِينَ إِلَى الدَّاعِ ۖ يَقُولُ الْكَافِرُونَ هَٰذَا يَوْمٌ عَسِرٌ ۝

(८) पुकार्नेवालातिर दगुरिराखेका हुनेछन्[7] तथा काफिरले भन्नेछन् कि यो दिन त अत्यन्त कठिन छ ।

[1]अर्थात् विगत जातिहरुको विनाश गर्‍यो जब उनले फुठ्लाए ।

[2]अर्थात् यिनमा शिक्षा-दीक्षाका पक्ष छन् । कोही यिनीबाट शिक्षा ग्रहण गरी शिर्क तथा पापबाट बच्न चाहन्छ त बच्न सक्छ । مُزْدَجَرٌ मुज़्दजर) वास्तवमा मुज़्तजर हो زَجْرٌ ज़ज्र सित यो मीमको साथ उद्‌गम (धातु) हो ।

[3]अर्थात् यस्तो कुरा जो विनाशबाट फर्काइदेओस् । अथवा यो कुर्‌आन पूर्ण हिक्मतवाला छ जसमा कुनै दोष एवं त्रुटि छैन अथवा अल्लाह तआ़ला जसलाई मार्गदर्शन दिन्छ तथा जसलाई विपथ गर्दछ, त्यसमा बडो हिक्मत छ जसलाई त्यही जान्दछ ।

[4]अर्थात् अल्लाहले जसका लागि दुर्भाग्य लेखिदिएको छ तथा त्यसका हृदयमा मुद्रा लगाइदिएको छ, त्यसलाई पैग़म्बरहरुको चेतावनीले के लाभ दिनसक्छ ? यसलाई त तर्साउनु, नतर्साउनु बराबर भएको कुरो छ । लगभग यसै अर्थमा यो आयत छ ।

﴿قُلْ فَلِلَّهِ الْحُجَّةُ الْبَالِغَةُ فَلَوْ شَاءَ لَهَدَاكُمْ أَجْمَعِينَ﴾ (अल-अनआम-१४९)

[5] يَوْمَ (यौम) बाट पहिला أُذْكُرْ (उज़्कुर) लोप छ, अर्थात् त्यस दिनलाई याद गर । نُكُرٌ (नोकुर) अति भयावह तथा तर्साउने, अभिप्राय महशरको मैदान तथा हिसाबका स्थानको भयानकता तथा परीक्षाहरु हुन् ।

[6]अर्थात् कब्रहरुबाट निस्केर उनीहरु यसरी फैलनेछन् तथा हिसाब स्थलतिर यति तीव्र गतिले जानेछन् कि जस्तै टिड्डी दल हो जो तत्क्षण अन्तरिक्षमा फैलेर जान्छ ।

[7] مُهْطِعِينَ، مُسْرِعِينَ दौड्नेछन्, पछि रहने छैनन् ।

كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوحٍ فَكَذَّبُوا عَبْدَنَا وَقَالُوا مَجْنُونٌ وَازْدُجِرَ ⑨

(९) उनीभन्दा पूर्व नूहका समुदायले पनि तिम्रा भक्तलाई झुठ्लाएको थियो । तथा पागल बताएर झिडक (हकार) दिएको थियो ।[1]

فَدَعَا رَبَّهُ أَنِّي مَغْلُوبٌ فَانْتَصِرْ ⑩

(१०) त उसले आफ्ना प्रभुसित प्रार्थना गऱ्यो कि म असहाय छु तिमी मेरो सहायता गर ।

فَفَتَحْنَا أَبْوَابَ السَّمَاءِ بِمَاءٍ مُنْهَمِرٍ ⑪

(११) त हामीले आकाशको द्वारहरुलाई मुसलधारे वर्षाका लागि खोलिदियौं ।[2]

وَفَجَّرْنَا الْأَرْضَ عُيُونًا فَالْتَقَى الْمَاءُ عَلَىٰ أَمْرٍ قَدْ قُدِرَ ⑫

(१२) तथा धर्तीबाट स्रोतहरुलाई प्रवाहित गरिदियौं त त्यस कार्यका लागि जो भाग्यमा लेखिदिइएको थियो (दुबै) पानी एकत्रित भयो ।[3]

وَحَمَلْنَاهُ عَلَىٰ ذَاتِ أَلْوَاحٍ وَدُسُرٍ ⑬

(१३) तथा हामीले उसलाई तख्ता एवं कील्लाहरु भएको डुङ्गामा सवार गरिहाल्यौं ।[4]

تَجْرِي بِأَعْيُنِنَا جَزَاءً لِمَنْ كَانَ كُفِرَ ⑭

(१४) जो हाम्रा आँखाका समक्ष चलिरहेको थियो । बदला त्यसको तर्फबाट जसको कुफ्र गरिएको थियो ।



---

[1]अर्थात् नूहको जातिले नूह अलैहिस्सलामलाई मात्र झुठ्लाएनन्, बरु झपारे तथा तर्साये तथा धम्काये पनि । जस्तो अर्को स्थानमा अल्लाहले भन्नुभयो :

﴿قَالُوا لَئِنْ لَمْ تَنْتَهِ يَا نُوحُ لَتَكُونَنَّ مِنَ الْمَرْجُومِينَ﴾

"उनले भने, हे नूह यदि तिमी रोकिएनौ भने तिमीलाई पथराव (ढुङ्गाले हान्नु) गरिदिइनेछ ।" (अश्शुअरा-११६)

[2] مُنْهَمِرٍ अर्थात् निकै अधिक तथा जोडदार هَمَرَ बग्नुका अर्थमा आउँछ । भनिन्छ कि चालीस दिनसम्म निरन्तर घोर वर्षा भइरहयो ।

[3]अर्थात् आकाश तथा धर्तीका पानीले मिलेर त्यो काम पूरा गरिदिए जो भाग्यमा लेखिदिएको थियो, अर्थात तूफान बनेर सबैलाई जलमग्न गरिदियो ।

[4] دُسُرٍ (दुसुर) دِسَار (दिसार) को बहुवचन हो, ती डोरीहरु जससित नौकाका तख्ताहरु बाँधिए अथवा ती किल्लाहरु जसबाट नौकालाई जोडियो ।

وَلَقَدْ تَّرَكْنٰهَآ اٰيَةً فَهَلْ مِنْ مُّدَّكِرٍ ﴿١٥﴾

(१५) तथा नि:सन्देह हामीले यस घटनालाई निशानी बनाएर[1] शेष राख्यौं, त छ कोही शिक्षा ग्रहण गर्नेवाला ।[2]

فَكَيْفَ كَانَ عَذَابِيْ وَنُذُرِ ﴿١٦﴾

(१६) (बताउ) मेरो प्रकोप तथा मेरा तर्साउने कुराहरु कस्तो रहयो ?

وَلَقَدْ يَسَّرْنَا الْقُرْاٰنَ لِلذِّكْرِ فَهَلْ مِنْ مُّدَّكِرٍ ﴿١٧﴾

(१७) तथा नि:सन्देह हामीले कुर्आनलाई सम्झाउनका लागि सरल गरिदिएका छौं ।[3] त के कोही शिक्षा ग्रहण गर्नेवाला छ ?

كَذَّبَتْ عَادٌ فَكَيْفَ كَانَ عَذَابِيْ وَنُذُرِ ﴿١٨﴾

(१८) आदका समुदायले पनि झुठ्लायो त कस्तो भयो मेरो प्रकोप तथा मेरा तर्साउने कुरा ।

اِنَّآ اَرْسَلْنَا عَلَيْهِمْ رِيْحًا صَرْصَرًا فِيْ يَوْمِ نَحْسٍ مُّسْتَمِرٍّ ﴿١٩﴾

(१९) हामीले उनीमाथि तीब्र निरन्तर चल्ने हावा एउटा निरन्तर अशुभ दिनमा पठाइदियौं ।[4]

---

[1] تَرَكْنَاهَا मा सर्वनाम سَفِيْنَة सफ़ीना (नवका) हो, अथवा فِعْلَة फेलह (कार्य) तिर फर्कन्छ । अर्थात تركنا هذه الفعلة التي فعلناها بهم عبرة و عظة "यो कार्य जो उनका साथ हामीले गर्‍यौं, त्यसलाई मानिसहरुका लागि शिक्षा एवं सदुपदेश बनाएर छाडिदियौं ।" (फ़तहुल कदीर)

[2] مُدَّكِر (मुद्दकिर) मूलत: مُذْتَكِر मुज़तकिर हो । त लाई द सित बदलिदियो तथा ज़ाललाई दाल (द) बनाएर दालको दालमा सन्धि गरिदिइयो । अर्थ हो शिक्षा तथा सदुपदेश गर्नेवाला । (फ़तहुल क़दीर)

[3]अर्थात् त्यसका अर्थ तथा भावार्थलाई सम्झनु, त्यसबाट शिक्षा ग्रहण गर्नु । त्यसलाई याद गर्न हामीले सरल बनाइदिएका छौं । वास्तविकता यो हो कि पवित्र कुर्आन आफ्ना चमत्कार तथा प्रभाव एवं भाषाशैलीका आधारमा अति उच्चशास्त्र हुनुका उपरान्त कोही व्यक्तिले अलिकति पनि ध्यान दिन्छ भने त्यसले अरबी व्याकरण तथा भाषाशैलीका किताबहरु नपढिकन त्यसलाई सरलताले बुझ्दछ । यसैप्रकार यो संसारको एकमात्र किताब हो जो एक-एक शब्द याद गरिन्छ, अन्यथा सानोभन्दा सानो किताबलाई पनि यसप्रकार याद गर्नु तथा त्यसलाई याद राख्नु अत्यन्त कठिन छ । यदि मानिसले आफ्ना मन तथा मस्तिष्कका द्वार खोलेर त्यसलाई शिक्षाको आँखाले पढ्छ, सदुपदेशका कानहरुले सुन्छ तथा बुझ्ने हृदयले त्यसमाथि विचार गर्दछ भने लोक-परलोकका सौभाग्यका द्वार उसका लागि खुल्दछन् तथा यो त्यसका हृदयका गहिराईमा उत्रेर कुफ्र तथा पापका सबै मलिनताहरुलाई सफा गरिदिन्छ ।

[4]भन्दछन् कि यो बुधवारको सन्ध्या थियो । जब त्यस प्रचण्ड, बरफले ढाकेको तथा सूईं-सूईं गर्दै हावाको आरम्भ भयो,

تَنْزِعُ النَّاسَ ۙ كَأَنَّهُمْ أَعْجَازُ نَخْلٍ مُّنْقَعِرٍ ﴿٢٠﴾

(२०) त जो मानिसहरुलाई उठाई-उठाई पछार्थ्यो, जस्तै कि उनी जसबाट काटिएका खजूरका रुख हुन् ।[1]

فَكَيْفَ كَانَ عَذَابِي وَنُذُرِ ﴿٢١﴾

(२१) त कस्तो रहयो मेरो दण्ड एवं मेरो तर्साउनु ?

وَلَقَدْ يَسَّرْنَا الْقُرْآنَ لِلذِّكْرِ فَهَلْ مِنْ مُدَّكِرٍ ﴿٢٢﴾

(२२) तथा निःसन्देह हामीले कुरआनलाई शिक्षाका लागि सरल गरिदिएका छौं, त के छ कोही शिक्षा ग्रहण गर्नेवाला ?

كَذَّبَتْ ثَمُودُ بِالنُّذُرِ ﴿٢٣﴾

(२३) समूदका समुदायले (पनि) तर्साउनेवालालाई झुठ्लाए ।

فَقَالُوا أَبَشَرًا مِنَّا وَاحِدًا نَتَّبِعُهُ إِنَّا إِذًا لَفِي ضَلَالٍ وَسُعُرٍ ﴿٢٤﴾

(२४) तथा भन्नलागे कि के हामीमध्येबाट एक व्यक्तिको हामीले अनुगमन गर्न लागौं ? तब त हामी अवश्य दोष एवं पागलपनमा परेका हुनेछौं ।[2]

أَأُلْقِيَ الذِّكْرُ عَلَيْهِ مِنْ بَيْنِنَا بَلْ هُوَ كَذَّابٌ أَشِرٌ ﴿٢٥﴾

(२५) के हामी सबैकामध्ये मात्र उसैमाथि प्रकाशना अवतरित गरियो ? होइन, बरु त्यो झूठा गर्व गर्ने मानिस हो ।[3]

---

अनि निरन्तर सात राति र आठ दिन चलिरहयो । यस हावाले घर तथा दुर्गहरुमा वन्द मानिसहरुलाई पनि माथिबाट जान्थ्यो तथा यसप्रकार जोडले उनीहरुलाई धर्तीमा बजार्थ्यो कि उनका शिर उनका शरीरबाट अलग्ग भएर जान्थे । यो दिन उनका लागि यातनाको कारण अशुभ सिद्ध भयो । यसको अभिप्राय यो होइन कि बुधवारको दिन अशुभ हो अथवा कुनै अन्य दिनमा अशुभ छ, जस्तो कि केही मानिस ठान्दछन् । مُسْتَمِرٌ (मुस्तमिर) को अभिप्राय यो हो कि यो प्रकोप त्यस दिनसम्म चालु रहयो जबसम्म सबै नष्ट भएनन् ।

[1]यो लामो आकारका साथ उनको विवशता तथा दूर्बलतालाई पनि देखाउनु छ कि अल्लाहको यातनाको अगाडी उनी केही गर्न सकेनन्, जबकि आफ्नो शक्ति तथा बलमाथि उनीहरुलाई बडो घमण्ड थियो । أعجاز (आजाज़) عَجز (अजज़) को बहुवचन हो, जो कुनै वस्तुका पछिल्ला भागलाई भन्छन् । مُنقَعِر (मुनकअिर) आफ्ना मूलबाट उखेल्नु तथा कटेर जानेवाला अर्थात खजूरका ती बोटको जस्तो जो आफ्नो मूलबाट उखेलिए एवं काटिएका होऊन्, उनका शव धर्तीमा परेका थिए ।

[2]अर्थात एउटा मानव-पुरुषलाई रसूल (ईशदूत) मानिलिनु उनका निकट मार्ग विचलन तथा दिवानगी थियो ।سُعُر (सुअुर) سَعِير (सअीर) को बहुवचन हो, यहाँ यसलाई उन्माद तथा कडा यातनाका अर्थमा प्रयोग गरिएको छ ।

[3] أَشِر (अशिर) को अर्थ अभिमानी तथा सीमा उल्लंघन गर्ने, अर्थात् उसले झूठ पनि बोलेका

سَيَعْلَمُونَ غَدًا مَّنِ الْكَذَّابُ الْأَشِرُ ⑳

(२६) अब सबैले भोली जानिहाल्नेछन् कि को झूठो तथा अहंकारी थियो ?[1]

إِنَّا مُرْسِلُوا النَّاقَةِ فِتْنَةً لَّهُمْ فَارْتَقِبْهُمْ وَاصْطَبِرْ ㉗

(२७) नि:सन्देह हामी उनका परीक्षाका लागि ऊँटनी पठाउनेछौं[2] त (हे स्वालेह !) तिमी उनको प्रतीक्षा गर तथा धैर्य राख ।[3]

وَنَبِّئْهُمْ أَنَّ الْمَاءَ قِسْمَةٌ بَيْنَهُمْ كُلُّ شِرْبٍ مُّحْتَضَرٌ ㉘

(२८) तथा उनलाई सूचित गरिदेउ कि पानी उनमा विभाजित छ,[4] प्रत्येक आफ्नो पालोमा उपस्थित हुनेछ ।[5]

فَنَادَوْا صَاحِبَهُمْ فَتَعَاطَىٰ فَعَقَرَ ㉙

(२९) त उनीहरुले आफ्ना साथीलाई पुकारे[6] जसले (ऊटनीमाथि) आक्रमण गऱ्यो[7] तथा (त्यसको) घूँडाहरु काटिदियो ।

छ त निकै ठूलो कि ममाथि प्रकाशना आउँछ, के हामीमध्ये केवल उसैमाथि प्रकाशना आउनु थियो ? अथवा उसकाद्वारा हामीमाथि आफ्नो बडाई जताउनु त्यसको उद्देश्य हो ।

[1]यो स्वयं, पैग़म्बरमाथि आरोप लगाउनेहरु अथवा ईशदूत सालेह अलैहिस्सलाम, जसलाई अल्लाहले प्रकाशना (वह्य) एवं नबूअतबाट सम्मानित गऱ्यो । "भोली" सित अभिप्राय क़ेयामतको दिन हो । अथवा संसारमा उनको यातनाका लागि निर्धारित दिन ।

[2]कि यिनी ईमान स्वीकार गर्छन् वा गर्दैनन् ? यो त्यही ऊटनी हो जो अल्लाहले स्वयं उनका भनाईमा पत्थरको एक चट्टानबाट निकालेको थियो ।

[3]अर्थात् हेर कि यिनी ईमानको मार्ग अपनाउँछन् अथवा होइन ? तथा उनका कपटहरुमा धैर्य गर ।

[4]अर्थात् एकदिन उँटनीले पानी पिउनका लागि तथा एक दिन समुदायले पानी पिउनका लागि ।

[5]तात्पर्य हो कि प्रत्येकको भाग त्यसका साथ नै विशेष छ जो आ-आफ्ना पालोमा उपस्थित भएर प्राप्त गरोस्, दोस्रो त्यस दिन नआओस् । شِرْبٌ (शिर्ब) पानीको भाग ।

[6]अर्थात् जसलाई उनीहरुले ऊटनीलाई वध गर्नका लागि तयार गरेका थिए, जसको नाम कुदार पुत्र सालिफ भनिन्छ, त्यसलाई पुकारे कि आफ्नो काम गरोस् ।

[7]अथवा तलवार वा ऊटनीलाई समात्यो तथा त्यसका खुट्टाहरु काटिदियो, अनि त्यसलाई वध गरिदियो । केही विद्वानहरुले تَعَاطَىٰ को अर्थ تَجَسَّرَ गरेका छन् अनि उसले दुस्साहस गऱ्यो ।

فَكَيْفَ كَانَ عَذَابِي وَنُذُرِ ﴿٣٠﴾

(३०) कस्तो भयो मेरो प्रकोप तथा मेरो तर्साइ ।

إِنَّا أَرْسَلْنَا عَلَيْهِمْ صَيْحَةً وَاحِدَةً فَكَانُوا كَهَشِيمِ الْمُحْتَظِرِ ﴿٣١﴾

(३१) हामीले उनीमाथि एउटा चित्कार (तीब्र ध्वनि) पठायौं त उनी यस्ता भइहाले जस्तो बाँड बनाउनेवालाको कुल्चिएको घाँस ।[१]

وَلَقَدْ يَسَّرْنَا الْقُرْآنَ لِلذِّكْرِ فَهَلْ مِن مُّدَّكِرٍ ﴿٣٢﴾

(३२) तथा हामीले शिक्षा ग्रहण गर्नका लागि कुर्‌आनलाई सरल गरिदिएका छौं, त के छ कोही शिक्षा ग्रहण गर्नेवाला ?

كَذَّبَتْ قَوْمُ لُوطٍ بِالنُّذُرِ ﴿٣٣﴾

(३३) लूतका समुदायले पनि तर्साउनेहरुलाई झुठ्लायो ।

إِنَّا أَرْسَلْنَا عَلَيْهِمْ حَاصِبًا إِلَّا آلَ لُوطٍ ۖ نَّجَّيْنَاهُم بِسَحَرٍ ﴿٣٤﴾

(३४) नि:सन्देह हामीले उनीमाथि पत्थरको वर्षा गर्ने हावा पठायौं[२] लूत (अलैहिस्सलाम) का परिवारवालाका अतिरिक्त, उनलाई प्रातः कालका समय[३] हामीले सुरक्षा (मुक्ति) प्रदान गरिदियौं ।[४]

---

[१] حَظِيرَة (हज़ीरह) مَحْظُورَة (महजूरह) को अर्थमा छ अर्थात बाड जो सुकेका दाउरा तथा झाडीहरुबाट जनावरहरुका लागि बनाइन्छ । مُحْتَظِر कर्ता संज्ञा हो, صاحِبُ الحَظِيرَة ، هَشِيم (हशीम) सुकेको घाँस अथवा काटिएको सुखी खेती । अर्थात् जस्तै एउटा बाड बनाउनेका सुकेका दाउरा तथा झाडीहरु निरन्तर कुल्चनाले स-साना टुक्रा भएर जान्छ यस्तै उनीहरु हाम्रा प्रकोपबाट टुक्रा-टुक्रा भइहाले ।

[२] अर्थात् यस्तो हावा पठायौं जसले उनलाई कंकरीहरु (ढुङ्गाको टुक्रा) हान्दथ्यो । अर्थात उनका वस्तीहरुलाई उनीमाथि यस्ता उलट-पलट गरिदियो कि उनको माथिको भाग तल तलको भाग माथि भइहाल्यो, अनि उनीमाथि कंकर, पत्थरको वर्षा भयो, जस्तो कि सूर: हूदमा आदिमा आइसकेको छ ।

[३] आले लूतसित अभिप्राय स्वयं ईशदूत लूत अलैहिस्सलाम तथा उनीमाथि ईमान स्वीकार गर्ने मानिस हुन्, जसमा लुतकि पत्नी सम्मिलित छैन, किनकि त्यसले ईमान स्वीकार गरेकी थिइन । हो लूतका दुई छोरीहरु उनका साथ थिए, जसलाई मुक्ति दियो । سحر (सहर) सित अभिप्राय रातको अन्तिम भाग हो ।

[४] अर्थात् उनलाई प्रकोपबाट बचाउनु हाम्रो दया तथा अनुग्रह थियो जो उनीमाथि भयो ।

نِّعْمَةً مِّنْ عِنْدِنَا ۚ كَذَٰلِكَ نَجْزِي مَنْ شَكَرَ ﴿٣٥﴾

(३५) आफ्नो कृपाले ! प्रत्येक कृतज्ञलाई हामीले यसैप्रकार प्रतिफल प्रदान गर्दछौं ।

وَلَقَدْ أَنْذَرَهُمْ بَطْشَتَنَا فَتَمَارَوْا بِالنُّذُرِ ﴿٣٦﴾

(३६) निःसन्देह त्यस (लूत) ले उनलाई हाम्रो पकडसित दर्शाएको थियो,[1] परन्तु उनीहरुले तर्साउनेहरुका विषयमा सन्देह एवं शंका तथा झगडा गरे ।[2]

وَلَقَدْ رَاوَدُوهُ عَنْ ضَيْفِهِ فَطَمَسْنَا أَعْيُنَهُمْ فَذُوقُوا عَذَابِي وَنُذُرِ ﴿٣٧﴾

(३७) तथा (लूत) (अलैहिस्सलाम) लाई उनका अतिथिहरुका विषयमा बहलाउन चाहे[3] त हामीले उनका आँखा अन्धा गरिदियौं,[4] (तथा भनिदियौं) मेरो प्रकोप तथा मेरो तर्साइ चाख ।

وَلَقَدْ صَبَّحَهُمْ بُكْرَةً عَذَابٌ مُسْتَقِرٌّ ﴿٣٨﴾

(३८) तथा निश्चित कुरो छ कि उनलाई प्रातः काल नै एउटा स्थानमा समात्ने निर्धारित प्रकोपले नष्ट गरिदियो ।[5]

[1]अर्थात् प्रकोप आउनुभन्दा पहिला हाम्रो कडा पकडसित तर्साएको थियो ।

[2]परन्तु उनले त्यसको चिन्ता गरेनन् बरु सन्देह गरे तथा चेतावनी दिनेहरुसित झगड्दै रहे ।

[3]अथवा बहलाए अथवा माँगे लूतबाट उनका अतिथिहरुलाई । अभिप्राय यो हो कि जब लूतको जातिलाई थाहा भयो कि केही सुन्दर युवक लूतकहाँ आएका छन् (जो वास्तवमा फरिश्ताहरु थिए, जो उनलाई दण्ड दिन आएका थिए) त उनीहरुले लूतसित भने कि यी अतिथिहरुलाई हाम्रा सुपुर्द गरिदेउ ताकि हामी उनीसित आफ्नो बिग्रेको अभिरूचिको तृप्ति गरुन् ।

[4]भन्दछन् कि यी फरिश्ता जिब्रील, मिकाईल, इस्राफिल अलैहिमुस्सलाम थिए । जब उनीहरुले व्यभिचारका लागि अतिथिहरुलाई लिनमा अधिक दूराग्रह गरे त जिब्रीलले आफ्ना पखेटाको एउटा भाग उनलाई हाने, जसबाट उनका आँखाको त गुच्चा नै बाहिर निस्किहाले । केही विद्वान भन्छन् कि मात्र आँखाको दृष्टि समाप्त भयो । जे होस्, साधारण प्रकोपभन्दा पहिला यो विशेष यातना उनीहरुलाई पुग्यो जो ईशदूत लूतका पास कुविचारले आएका थिए, तथा उनी आँखा तथा आँखाको दृष्टिबाट बञ्चित भई घर पुगे तथा त्यसपछि प्रातः त्यस सार्वजनिक प्रकोपमा नाश भए जो पूरा समुदायका लागि आयो । (तफ़सीर इब्ने कसीर)

[5]अर्थात् बिहानै उनका पास निर्धारित प्रकोप आइपुग्यो । مُسْتَقِرٌّ को अर्थ उनीमाथि घटित हुनेवाला, जो उनलाई नाश नगरीकन नछाडोस् ।

فَذُوْقُوْا عَذَابِيْ وَ نُذُرِ ﴿٣٩﴾

(३९) तसर्थ मेरा प्रकोप मेरा तर्साइ (चेतावनी) को स्वाद चाख ।

وَلَقَدْ يَسَّرْنَا الْقُرْاٰنَ لِلذِّكْرِ فَهَلْ مِنْ مُّدَّكِرٍ ﴿٤٠﴾

(४०) तथा निःसन्देह हामीले कुर्आनलाई शिक्षा एवं सदुपदेशका लागि सरल गरिदिएका छौं,[1] त के छ कोही शिक्षा ग्रहण गर्नेवाला ?

وَلَقَدْ جَآءَ اٰلَ فِرْعَوْنَ النُّذُرُ ﴿٤١﴾

(४१) तथा फिरऔंनीहरुका पासमा पनि तर्साउनेहरु आए ।[2]

كَذَّبُوْا بِاٰيٰتِنَا كُلِّهَا فَاَخَذْنٰهُمْ اَخْذَ عَزِيْزٍ مُّقْتَدِرٍ ﴿٤٢﴾

(४२) उनीहरुले हाम्रा समस्त निशानीहरुले झुठ्लाए,[3] त हामीले उनलाई अत्यन्त प्रभावी एवं शक्तिशाली पकड्नेवालाहरुको जस्तै पकडिहाल्यौं ।[4]

اَكُفَّارُكُمْ خَيْرٌ مِّنْ اُولٰٓئِكُمْ اَمْ لَكُمْ بَرَآءَةٌ فِي الزُّبُرِ ﴿٤٣﴾

(४३) (हे मक्कावालाहरु !) के तिम्रा काफिर ती काफिरहरुभन्दा केही श्रेष्ठ छन् ?[5] अथवा तिम्रा लागि पूर्वका किताबहरुमा छुटकारा लेखिएको छ ?[6]

[1]यस सूरःमा पवित्र कुर्आनलाई सरल बनाउनुको चर्चा पटक-पटक गर्नाले उद्देश्य यो हो कि कुर्आनलाई याद गर्नु तथा सम्झनुलाई सहज गरिदिनु अल्लाहको ठूलो अनुग्रह हो । त्यसको कृतज्ञतावाट मानिसलाई कहिल्यै विमुख हुनुहुँदैन ।

[2] نُذُرٌ (नुजुर) نَذِيْرٌ नजीर (तर्साउनेवाला) को बहुवचन हो, अथवा إنذار (इन्जार) को अर्थमा छ । (फ़तहुल क़दीर)

[3]ती निशानीहरु जसद्वारा ईशदूत मूसा अलैहिस्सलामले फिरऔन तथा फिरऔंनीहरुलाई तर्साए । यी नौं निशानीहरु थिए जसको चर्चा पहिले गुज्रिसकेको छ ।

[4]अर्थात् उनीहरुलाई नष्ट गरिदियो, किनकि त्यो यातना यस्तो प्रभुत्वशालीको पकड थियो जो प्रतिकार गर्नुमा समर्थ छ, त्यसको पकडका पश्चात बाँच्न सक्दैन ।

[5]यो प्रश्न इन्कारका लागि छ अर्थात् हे अवसरवादीहरु ! तिम्रा काफिर विगतका काफिरहरुभन्दा उत्तम छैनन् । जब उनीहरु आफ्ना कुफ्रका कारण नाश गरिदिइए त तिमी, जबकि तिमी उनीभन्दा अधिक नराम्रा छौ, प्रकोपबाट सुरक्षाको आशा किन राख्दछौ ?

[6] زُبُرٌ (जुबुर) सित अभिप्राय विगत अम्बिया (ईशदूतहरु) माथि अवतरित किताबहरु (धर्मशास्त्र) हुन् । अर्थात के तिम्रा विषयमा पहिलाका अवतरित किताबहरुमा स्पष्ट गरिदिइएको छ कि यी अरब अथवा कुरैश जो इच्छा होस् गरिरहून्, उनीमाथि कोही प्रभावशाली हुनेछैन ।

| | |
|---|---|
| (४४) अथवा यो भन्छन् कि हामी प्रभावशाली हुने समूह हौं ।[१] | أَمْ يَقُولُونَ نَحْنُ جَمِيعٌ مُّنتَصِرٌ ﴿٤٤﴾ |
| (४५) निकटमै यो समूह पराजित गरिनेछ तथा पिठ्यूँ देखाइ भाग्नेछ ।[२] | سَيُهْزَمُ الْجَمْعُ وَيُوَلُّونَ الدُّبُرَ ﴿٤٥﴾ |
| (४६) बरु केयामत (प्रलय) को क्षण उनका वचनको समय हो तथा केयामत अत्यन्त कठिन एवं अत्यन्त कटु वस्तु हो ।[३] | بَلِ السَّاعَةُ مَوْعِدُهُمْ وَالسَّاعَةُ أَدْهَىٰ وَأَمَرُّ ﴿٤٦﴾ |
| (४७) नि:सन्देह पापीहरु पथ-विचलन तथा यातनामा छन् । | إِنَّ الْمُجْرِمِينَ فِي ضَلَالٍ وَسُعُرٍ ﴿٤٧﴾ |
| (४८) जुन दिन उनीहरु घोप्टिएर आगोमा लतारिनेछन् (तथा उनीसित भनिनेछ) नरक्को आगो लाग्नुको स्वाद चाख ।[४] | يَوْمَ يُسْحَبُونَ فِي النَّارِ عَلَىٰ وُجُوهِهِمْ ذُوقُوا مَسَّ سَقَرَ ﴿٤٨﴾ |
| (४९) नि:सन्देह हामीले प्रत्येक वस्तुलाई एक | إِنَّا كُلَّ شَيْءٍ خَلَقْنَاهُ بِقَدَرٍ ﴿٤٩﴾ |

[१]संख्याको अधिकता तथा शक्ति साधनहरुका कारण कुनै अरु अनुमति प्रभुत्वशाली हुनुको सम्भावना छैन । अथवा अभिप्राय यो हो कि हाम्रो मामिला एकत्र छ, हामी शत्रुसित प्रतिशोध लिन समर्थ छौं ।

[२]अल्लाहले उनका भ्रमको खण्डन गऱ्यो । समूहसित अभिप्राय मक्काका काफ़िर हुन् । जस्तै उनीहरुलाई बद्रमा पराजय भयो तथा उनी पिठ्यूँ फर्काएर भागे तथा शिर्कका प्रमुख एवं कुफ्रका प्रधान नष्ट गरिए । बद्रका रणका अवसरमा जब नबी सल्लल्लाहु अलैहि वसल्लम अति विनम्रताले रोइ-रोइ आफ्ना शिरमा प्रार्थनामा लीन हुनुहुन्थ्यो त आदरणीय अबूबक्र रजोयल्लाहु अन्हुले भन्नुभयो कि حسبك يا رسول الله! أَلْحَحْتَ على ربـك अब भयो अल्लाहका रसूल ! तपाईंले आफ्ना प्रभुका अगाडी निकै रुनु भयो । फेरि उहाँ खेमाभन्दा बाहिर आउनुभयो त उहाँका मुखमा यही आयत थियो । (अल-बुख़ारी, तफ़सीर सूर: इक़तरबतिस साअ:)

[३]أدهى (अदहा) دَهَاءٌ (दहाअ) बाट बनेको हो, घोर अपमानकारी । أَمَرُّ (अमर्र) مَرَارَةٌ (मरारह) बाट हो, अति तितो, अर्थात् यो संसारमा जो हत गरिए, बन्दी बनाइए आदि उनको अन्तिम यातना होइन, बरु अझ पनि कडा यातनाहरु उनलाई क़ेयामतका दिन दिइनेछ, जसको उनीसित वादा गरिन्छ ।

[४]سَقَرٌ (सक़र) पनि नरक्को नाम हो अर्थात् त्यसको ताप तथा यातनाको कडाईको स्वाद चाख ।

(निर्धारित) अनुमान पैदा गरेका छौं ।[1]

وَمَآ اَمْرُنَآ اِلَّا وَاحِدَةٌ كَلَمْحٍۭ بِالْبَصَرِ ۝٥٠

(५०) तथा हाम्रो आदेश केवल एक पटक (को वाक्य) नै हुन्छ, जस्तै आँखाको परेलीको झिम्काइ ।

وَلَقَدْ اَهْلَكْنَآ اَشْيَاعَكُمْ فَهَلْ مِنْ مُّدَّكِرٍ ۝٥١

(५१) तथा हामीले तिमीजस्ता धेरैलाई नष्ट गरिदिएका छौं,[2] त कोही छ शिक्षा ग्रहण गर्नेवाला ।

وَكُلُّ شَىْءٍ فَعَلُوْهُ فِى الزُّبُرِ ۝٥٢

(५२) तथा जे-जति उनीहरुले (कर्म) गरेका छन् सबै कर्मपत्रमा लेखिएका छन् ।[3]

وَكُلُّ صَغِيْرٍ وَّكَبِيْرٍ مُّسْتَطَرٌ ۝٥٣

(५३) (यसैप्रकार) प्रत्येक सानो-ठूलो कुरा लेखिएको छ ।[4]

اِنَّ الْمُتَّقِيْنَ فِىْ جَنّٰتٍ وَّنَهَرٍ ۝٥٤

(५४) निःसन्देह सदाचारीहरु स्वर्ग एवं सरिताहरुमा हुनेछन् ।[5]

فِىْ مَقْعَدِ صِدْقٍ عِنْدَ مَلِيْكٍ مُّقْتَدِرٍ ۝٥٥

(५५) सत्य एवं सम्मानको बैठकमा[6] सामर्थ्य भएको स्वामीको पास ।[7]

[1]अइम्मये सुन्नत (इस्लामी धर्मका विशेषज्ञहरु) ले यस आयत तथा यसप्रकारका अन्य आयतहरुबाट अल्लाहको भाग्यलेखलाई प्रमाणित गरेका छन्, जसको अभिप्राय यो छ कि अल्लाह तआलालाई सृष्टि पैदा गर्नुभन्दा पहिला नै सबैको ज्ञान थियो तथा उसले सबको भाग्य लेखिदिएको छ र यसबाट क़द्रिया सम्प्रदायको खण्डन गरेका छन् जो सहाबाका युगका अन्तमा प्रकट भयो ।

[2]अर्थात् विगत समुदायहरुका काफ़िरहरुलाई जो कुफ़्र (इन्कार) मा तिमीजस्तै थिए । (फ़तहुल क़दीर)

[3]अथवा दोस्रो अर्थ हो, लौहे महफ़ूज (सुरक्षित पट्टिका) मा अंकित छ ।

[4]अर्थात् सृष्टिका सबै कथन तथा कर्म लेखिएका छन्, साना हुन् अथवा ठूला, तुच्छ हुन् अथवा महान् । हतभागाहरुका चर्चाका पश्चात अब सौभागीहरुको चर्चा गरिंदैछ ।

[5]अर्थात् विभिन्न तथा अनेक प्रकारका बगैंचा हुनेछन् نَهَرٌ यो जातिवाचकका रुपमा छ जसमा स्वर्गका सबै नहरहरु सम्मिलित छन् ।

[6] مَقْعَدِ صِدْقٍ (मकअदे सिद्क़) सत्य अथवा प्रतिष्ठाको आसन जसमा न पापको कुरा हुनेछ न बकवास । अभिप्राय स्वर्ग हो ।

[7] مَلِيْكٍ مُّقْتَدِرٍ सामर्थ्यवान अधिपति अर्थात् त्यो प्रत्येक प्रकारका सामर्थ्यसित युक्त छ, जा

## सूरतुर्रहमान-५५

سُورَةُ الرَّحْمٰنِ

सूर: रहमान* मदीनामा अवतरित भएको, यसमा अठहत्तर आयतहरु एवं ती रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

اَلرَّحْمٰنُ ﴿١﴾

(१) दयालुले ।

عَلَّمَ الْقُرْاٰنَ ﴿٢﴾

(२) कुर्आन सिकायो ।[1]

خَلَقَ الْاِنْسَانَ ﴿٣﴾

(३) उसैले मनुष्यलाई पैदा गऱ्यो ।[2]

عَلَّمَهُ الْبَيَانَ ﴿٤﴾

(४) उसैले बोल्न सिकायो ।[3]

---

चाहन्छ गर्न सक्छ, कसैले उसलाई विवश गर्न सक्दैन । عِنْدَ (पास) यो त्यस प्रतिष्ठित तथा सम्मानतिर संकेत हो जो ईमान भएकाहरुलाई अल्लाहका पास प्राप्त हुनेछ ।

*यस सूर:लाई मानिसहरुले मदनी (मदीनामा अवतरित) मानेका छन्, तर सही यही हो कि यो मक्की (मक्कामा अवतरित) हो । (फ़तहुल क़दीर) यसको पुष्टि त्यस हदीसबाट पनि हुन्छ जसमा नबी सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो कि के कुरो छ कि तिमी चूप रहन्छौ । तिमीभन्दा त राम्रा जिन्न छन् कि जब जिन्नवाली रातमा मैले यो सूर: उनका लागि पढे त जहिले पनि म ﴿فَبِاَيِّ اٰلَاۗءِ رَبِّكُمَا تُكَذِّبٰنِ﴾ पढ्थें त उनीहरु त्यसका उत्तरमा भन्थे «لاَ بِشَيْءٍ مِنْ نِعَمِكَ رَبَّنَا نُكَذِّبُ فَلَكَ الْحَمْدُ» (तफ़सीर सूरतुर्रहमान, यसको चर्चा अल्बानीले सहीह तिर्मिजीमा गर्नुभएको छ)

[1]भन्दछन् कि यो मक्कावासीहरुको उत्तरमा छ, जो भन्थे कि यो कुर्आन मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमलाई कुनै मानवले सिकाउँछ । केही अन्य भन्दछन् कि उनका यस प्रश्नका उत्तरमा छ कि 'रहमान' के हो ? कुर्आन सिकाउनुको अभिप्राय हो त्यसलाई सहज गरिदियो अथवा अल्लाहले आफ्ना पैग़म्बरलाई सिकायो तथा पैग़म्बरले उम्मत (मानिसहरु) लाई सिकाउनु भयो । यस सूर:मा अल्लाहले आफ्ना धेरै वरदानहरुलाई गणना गरेको छ । किनकि कुर्आनको शिक्षा यिनमा प्रतिष्ठा, सम्मान तथा महत्व एवं सम्मानको दृष्टिले सबभन्दा उत्तम एवं प्रत्यक्ष छ, अत: सर्वप्रथम यस उपकारको वर्णन गऱ्यो । (फ़तहुल क़दीर)

[2]अर्थात् यिनी बाँदर आदि जन्तुवाट उन्नति गर्दा-गर्दा मानिस बनेका होइनन्, जस्तो कि डार्बिनको जीव विकास सिद्धान्त छ, बरु मानिसलाई त्यसै रुपमा अल्लाहले पैदा गरेको हो जो जनावरहरुभन्दा अलग एउटा सृष्टि हो । इंसान (मानिस) शब्द जातिवाचक स्वरुप हो ।

[3]यस वर्णनसित अभिप्राय प्रत्येक व्यक्तिको आफ्नो मातृभाषा (बोली) हो जो बिना सिके

| | |
|---|---|
| (५) सूर्य तथा चन्द्रमा (निर्धारित) हिसाबमा छन् ।[1] | اَلشَّمْسُ وَ الْقَمَرُ بِحُسْبَانٍ ۝ |
| (६) तथा तारा एवं वृक्ष दुबै सज्दा गर्दछन् ।[2] | وَّالنَّجْمُ وَالشَّجَرُ يَسْجُدٰنِ ۝ |
| (७) उसैले आकाशलाई उच्च गर्‍यो तथा उसैले तुला राख्यो ।[3] | وَالسَّمَآءَ رَفَعَهَا وَوَضَعَ الْمِيْزَانَ ۝ |
| (८) ताकि तिमी तौलनु (जोख्नु) मा सीमा उल्लंघन नगर ।[4] | اَلَّا تَطْغَوْا فِي الْمِيْزَانِ ۝ |
| (९) तथा न्यायका साथ तौल सही राख तथा तौलमा कम नदेउ । | وَاَقِيْمُوا الْوَزْنَ بِالْقِسْطِ وَلَا تُخْسِرُوا الْمِيْزَانَ ۝ |
| (१०) तथा उसैले सृष्टिका लागि धर्ती ओछ्यायो । | وَالْاَرْضَ وَضَعَهَا لِلْاَنَامِ ۝ |
| (११) जसमा फलहरु छन् तथा गुच्छा भएका खजूरका वृक्ष छन् ।[5] | فِيْهَا فَاكِهَةٌ وَّالنَّخْلُ ذَاتُ الْاَكْمَامِ ۝ |

स्वयं बोल्दछ तथा यसमा आफ्ना मनका कुरा व्यक्त गर्दछ, यहाँसम्मकि त्यो सानो बच्चा पनि जसलाई कुनै कुराको ज्ञान तथा बोध हुँदैन । यो त्यस ईश्वरीय शिक्षा-दीक्षाको परिणाम हो जसको चर्चा यस आयतमा छ ।

[1]अर्थात् अल्लाहद्वारा निर्धारित गरिएका हिसाबले आफ्ना स्थानहरुमा गतिशील छ, उनको उल्लंघन गर्दैन।

[2]जस्तै अर्को स्थानमा भन्नुभयो :

﴿ اَلَمْ تَرَ اَنَّ اللّٰهَ يَسْجُدُ لَهٗ مَنْ فِي السَّمٰوٰتِ وَمَنْ فِي الْاَرْضِ وَالشَّمْسُ وَالْقَمَرُ وَالنُّجُوْمُ وَالْجِبَالُ وَالشَّجَرُ وَالدَّوَآبُّ ﴾

"के तिमीले देखेनौ कि अल्लाहका समक्ष नतमस्तक छन् सबै आकाशवालाहरु, सबै धर्तीमा भएकाहरु, सूर्य, चन्द्रमा, तारा, पर्वत, वृक्ष तथा पशु ।" (अल-हज्ज-१८)

[3]अर्थात् धर्तीमा न्याय राख, जसको उसलाई मानिसहरुलाई आदेश दियो जस्तै भन्नुभयो:

﴿ لَقَدْ اَرْسَلْنَا رُسُلَنَا بِالْبَيِّنٰتِ وَاَنْزَلْنَا مَعَهُمُ الْكِتٰبَ وَالْمِيْزَانَ لِيَقُوْمَ النَّاسُ بِالْقِسْطِ ﴾

"नि:सन्देह हामीले आफ्ना सन्देष्टाहरुलाई स्पष्ट निशानीहरु दिएर पठायौं तथा उनका साथ पुस्तक एवं मीज़ान (तुला) अवतरित गर्‍यौं ताकि मानिस न्यायमा स्थापित रहून ।" (अल-हदीद-२५)

[4]अर्थात् न्यायको उल्लंघन नगर ।

[5] أَكْمَام (अकमाम) كُمّ (किम्म) को बहुवचन हो, खजूरमा चढेको आवरण ।

(१२) तथा भूस भएको अनाज़ हो[1] तथा सुगन्धित फूल हुन् । وَالْحَبُّ ذُو الْعَصْفِ وَالرَّيْحَانُ ﴿١٢﴾

(१३) त (हे मनुष्य एवं जिन्नहरु !) तिमी आफ्ना प्रभुका कुन-कुन उपकारहरुलाई झुठ्लाउनेछौ ।[2] فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿١٣﴾

(१४) उसले मनुष्यलाई सुकेको माटोबाट पैदा गऱ्यो जो ठिकरी (सुकेको लेसिलो माटो) को जस्तो थियो ।[3] خَلَقَ الْإِنسَانَ مِن صَلْصَالٍ كَالْفَخَّارِ ﴿١٤﴾

(१५) तथा जिन्नातलाई अग्निको ज्वालाबाट पैदा गऱ्यो ।[4] وَخَلَقَ الْجَانَّ مِن مَّارِجٍ مِّن نَّارٍ ﴿١٥﴾

(१६) तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपकारहरुलाई झुठ्लाउनेछौ ?[5] فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿١٦﴾

(१७) त्यो प्रभु हो दुबै पूर्वहरु एवं दुबै पश्चिमहरुको ।[6] رَبُّ الْمَشْرِقَيْنِ وَرَبُّ الْمَغْرِبَيْنِ ﴿١٧﴾

[1] حَبٌّ हब्ब (दाना) सित अभिप्राय प्रत्येक त्यो खाद्य पदार्थ हो जो मानिस तथा जन्तु खान्छन्, सुकेर त्यसको बोट भूस बन्नजान्छ जो जनावरहरुका काम आउँछ ।

[2] यो मानव तथा दानव (जिन्न) दुबैसित सम्बोधन छ । अल्लाह आफ्ना वरदानहरुलाई गणना गरेर उनीसित प्रश्न गरिराखेको छ । यो पुनरावृत्ति त्यस व्यक्तिका समान छ जो कसैमाथि निरन्तर उपकार गर्दछ, किन्तु त्यो त्यसका उपकारको इन्कार गर्दछ, जस्तै भनोस् कि मैले तिम्रो अमूक-अमूक काम गरें, के तिमी इन्कार गर्दछौ ? अमुक-अमुक वस्तु तिमीलाई दियो, के तिमीलाई याद छैन ? तिमीमाथि अमुक उपकार गरे, के तिमीलाई हाम्रो अलिकति पनि ज्ञान छैन ? (फ़तहुल क़दीर)

[3] صَلْصَال (सल्साल) सुकेको माटो जसमा ध्वनि हुन्छ । فَخَّار (फख़्खार) आगोमा पाकेको माटो जसलाई ठिकरी भन्दछन् । त्यस इंसानसित अभिप्राय आदरणीय आदम हुन् जसको पहिला माटोबाट पुतला बनाइयो तथा पछि अल्लाहले त्यसमा आत्मा फुक्यो, अनि पछि उनको बायाँ पसली (करङ्ग) बाट 'हव्वा' लाई पैदा गऱ्यो, अनि यी दुबैबाट मानवीय वंश चल्यो ।

[4] यसबाट अभिप्राय सबभन्दा पहिला जिन्न हुन्, जो जिन्नहरुको पितामह हो अथवा जिन्न जातिवाचक स्वरुप हो जस्तो कि अनुवाद जातिवाचकका आधारमा गरिएको छ । مَارِج (मारिज)आगोबाट उच्च हुने ज्वालालाई भन्छन् ।

[5] अर्थात् तिम्रो यो जन्म तथा पछि तिमीबाट अधिक वंशहरुको जन्म तथा अधिकता पनि अल्लाहका वरदानहरुमध्ये छ । के तिमी यस उपकारको इन्कार गर्नेछौ ?

[6] एउटा गर्मीको पूर्व तथा एउटा जाडोको पूर्व, यसैप्रकार पश्चिम छ । यसैले दुबैलाई

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿١٨﴾

(१८) त (हे जिन्न एवं मनुष्यहरु !) तिमी आफ्ना प्रभुको कुन-कुन कृपाहरुलाई झुठ्लाउनेछौ ?

مَرَجَ الْبَحْرَيْنِ يَلْتَقِيَانِ ﴿١٩﴾

(१९) उसले दुई समुद्रलाई प्रवाहित गरिदियो जो एक-अर्कासँग मिल्छन् ।

بَيْنَهُمَا بَرْزَخٌ لَّا يَبْغِيَانِ ﴿٢٠﴾

(२०) ती दुबैका मध्ये एउटा रोक (छेक) छ कि त्यसभन्दा अगाडी बढ्न सक्दैनन् ।[1]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٢١﴾

(२१) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन चाहिं उपकारहरुलाई झुठ्लाउनेछौ ?

يَخْرُجُ مِنْهُمَا اللُّؤْلُؤُ وَالْمَرْجَانُ ﴿٢٢﴾

(२२) ती दुबैबाट मोती तथा मूँगा निस्कन्छन् ।[2]

---

दुई वचन वर्णित गरिएको छ । ऋतुहरुका अनुसार पूर्व तथा पश्चिम भिन्न हुनुमा पनि यसमा जिन्न तथा मानिसहरुका धेरै हित छन्, यसकारण यसलाई पनि उपकार भनिएको छ ।

[1] مَرَجَ ، أَرْسَلَ का अर्थमा छ, अर्थात् प्रवाहित गरिदिए । यसको सारांश यो हो कि दुई नदीहरुबाट अभिप्राय केही धर्मविदका विचारले उनका अलग-अलग अस्तित्व छ, जस्तै मिठो पानीका नदीहरु छन् जसबाट खेतीहरु सिंचिन्छन् तथा मानिस उनको पानी अन्य आवश्यकताहरुमा पनि प्रयोग गर्दछ । दोस्रो प्रकार सागरहरुको जल हो जो नूनिलो छ, जसका केही अन्य लाभ छन् । यी दुबै आपसमा मिल्दैनन् । केही अरु विद्वानले यसको भावार्थ यो लिएका छन् कि नूनिला सागरहरुमा मिठो पानीका लहरहरु चल्छन् तथा यी दुबै लहरहरु आपसमा मिल्दैनन्, बरु एक-अर्काबाट अलग रहन्छन् । त्यसको एक रुप यो पनि हो कि अल्लाह तआलाले नूनिला सागरहरुको तल्लो तहमा नै कैयन् स्थानहरुमा मिठो पानीका लहरहरु पनि प्रवाहित गरिदिएको छ तथा त्यो नूनिलो पानीमा अलग्गै रहन्छ । दोस्रो रुप यो पनि हो कि माथि नूनिलो पानी होस् तथा त्यसको तल्लो भागमा मिठो जलको स्रोत, जस्तो कि वास्तवमा केही स्थानहरुमा यस्तो छ । तेस्रो दशा यो हो कि जुन स्थानहरुमा मिठो पानीका नदीहरुको पानी सागरमा गएर खस्छ त्यहाँ कैयन् मानिसहरुले देखेका छन् कि दुबैको पानी कैयन् कोषहरुसम्म यसैप्रकार साथ-साथ चल्छ कि एकातिर मिठो नदीको पानी तथा दोस्रोतिर विस्तृत समुद्रको नूनिलो पानी, उनका मध्ये यद्यपि कुनै छेक छैन, परन्तु यी परस्पर मिल्दैनन् । दुबैका बीच यो त्यो बर्ज़ख (छेक) छ जो अल्लाहले राखिदिएको छ, दुबै त्यसबाट अगाडी बढ्दैनन् ।

[2] مَرْجَان सित सानो मोती अथवा मूँगा अभिप्राय छन् । भन्दछन् कि आकाशबाट वर्षा हुन्छ तथा सीपिहरु आफ्ना मुख खोलिदिन्छन्, जुन थोपा त्यसका भितर पर्दछन् त्यो मोती बन्न जान्छ । प्रसिद्ध यही छ कि मोती आदि मिठा पानीका नदीहरुबाट होइन बरु नूनिला पानीका समुद्रबाटै निस्कन्छन्, परन्तु पवित्र कुरआनले दुई वचन सर्वनाम प्रयोग गरेको छ जसबाट विदित हुन्छ कि दुबैबाट मोती निस्कन्छन् ।

| | |
|---|---|
| (२३) त त्यसपछि तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?[1] | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٢٣﴾ |
| (२४) तथा अल्लाहकै (स्वामित्वमा) छन् ती (जहाज) जो समुद्रहरुमा पर्वत जस्तै उच्च (उभिएर) चलिराखेका छन् ।[2] | وَلَهُ الْجَوَارِ الْمُنشَآتُ فِي الْبَحْرِ كَالْأَعْلَامِ ﴿٢٤﴾ |
| (२५) त (हे मनुष्य एवं जिन्नहरु !) तिमी आफ्ना प्रभुका कुन-कुन कृपाहरुलाई झुठ्लाउनेछौ ?[3] | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٢٥﴾ |
| (२६) धर्तीमा जे-जति पनि छ सबै नश्वर छ । | كُلُّ مَنْ عَلَيْهَا فَانٍ ﴿٢٦﴾ |
| (२७) केवल तिम्रा प्रभुको मुख (अस्तित्व) जो महान एवं सम्मानित छ, शेष रहनेछ । | وَيَبْقَىٰ وَجْهُ رَبِّكَ ذُو الْجَلَالِ وَالْإِكْرَامِ ﴿٢٧﴾ |
| (२८) त त्यसो भए तिमी दुबैका कुन | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٢٨﴾ |

किनकि मोती अधिकांश त समुद्रबाटै निस्कन्छ, यसकारण त्यसको प्रख्याति भएको छ । तैपनि मिठा नदीहरुबाट त्यसको इन्कार संभव छैन, वरु वर्तमान युगका प्रयोगहरुबाट सिद्ध भएको छ कि मिठा नदीहरुमा पनि मोती निकाल्नु कठिन कुरो हो । केही विद्वानहरुले भने कि अभिप्राय योग हो । यिनीमध्ये कुनै एकबाट पनि मोती निस्कन्छ भने त तिनीमाथि दुई वचन बोल्नु सही छ । केही अन्यले भनेका छन् कि मिठा नदीहरु पनि साधारणत: समुद्रमा नै खस्दछन्, तथा त्यहींबाट मोती निकालिन्छ, यसकारण यद्यपि उद्गम विन्दु समुद्रनै भयो परन्तु अन्य नदीहरुको अंश पनि यसमा सम्मिलित छ । किन्तु वर्तमान युगका प्रयोगहरुका पश्चात यी कल्पनाहरुको आवश्यकता छैन ।

[1]यो रत्न तथा मोती सुन्दरता तथा श्रृङ्गारको साधन हो, तथा धनी मानिस उनलाई आफ्नो सुन्दरताको रुचिको तृप्तिका लागि तथा शोभा बढाउनका लागि प्रयोग गर्दछन् । अत: यिनी अनुकम्पा हुनु पनि स्पष्ट छ ।

[2]الجوار (अलजवार) جَارِيَةٌ (जारीयह) चल्नेवालीको वहुवचन हो तथा लुप्त विशेष्य السُّفُن (नौकाहरु) का विशेषण हुन् । مُنْشَآتٌ को अर्थ مرفوعات हो, उच्च गरिएको । अभिप्राय पाल हो, जो वायु पोतहरुमा झन्डाका समान माथि तथा उच्च बनाइन्छन् । केही विद्वानले यसको अर्थ निर्मित गरेका छन्, अर्थात् अल्लाहद्वारा बनाइएका जो समुद्रमा चल्छन् ।

[3]यिनीद्वारा पनि यातायात तथा भारवाहनको जो सुविधाहरु छन् त्यसलाई बताउनुको आवश्यकता छैन । अत: यो पनि अल्लाहको महान अनुकम्पा हो ।

कुन उपहारहरुलाई झुठ्लाउनेछौ ।[१]

يَسْـَٔلُهُۥ مَن فِى ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ ۚ كُلَّ يَوْمٍ هُوَ فِى شَأْنٍ ﴿٢٩﴾

(२९) सबै आकाश एवं धर्तीवाला उसैसित माँगदछन् ।[२] प्रत्येक दिन त्यो एउटा कार्यमा छ ।[३]

فَبِأَىِّ ءَالَآءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٣٠﴾

(३०) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपकारहरुलाई झुठ्लाउन सक्नेछौ ?[४]

سَنَفْرُغُ لَكُمْ أَيُّهَ ٱلثَّقَلَانِ ﴿٣١﴾

(३१) (हे जिन्न तथा मानिसहरुका समूह !) शीघ्र नै हामी तिमीतिर पूर्णत: आकर्षित हुनेछौं ।[५]

فَبِأَىِّ ءَالَآءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٣٢﴾

(३२) अनि तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ।

يَٰمَعْشَرَ ٱلْجِنِّ وَٱلْإِنسِ إِنِ ٱسْتَطَعْتُمْ أَن تَنفُذُوا۟ مِنْ أَقْطَارِ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ فَٱنفُذُوا۟ ۚ لَا تَنفُذُونَ

(३३) (हे जिन्न एवं मनुष्यहरुका गिरोह !) यदि तिमीमा आकाशहरु एवं धर्तीका किनारहरुबाट निस्कनुको शक्ति छ भने निस्कि भाग ।[६] बिना प्रभुत्व

[१]संसारको समाप्तिका पश्चात प्रतिफल तथा दण्ड अर्थात् न्यायको प्रबन्ध हुनेछ, अत: यो पनि महान उपकार हो जसमाथि अल्लाहको कृतज्ञता व्यक्त गर्नु अनिवार्य छ ।

[२]अर्थात् सबै उसमाथि आश्रित तथा त्यसका द्वारका भिखारी छन् ।

[३]प्रत्येक दिनको अर्थ प्रत्येक क्षण । شَأْن (शान) को अर्थ कार्य तथा विषय, अर्थात् प्रत्येक समय त्यो केही न केही गर्दैरहन्छ, कसैलाई रोगी बनाइराखेको छ त कसैलाई स्वस्थ, कसैलाई धनी बनाइराखेको छ त कुनै धनीलाई निर्धन, कसैलाई रङ्कबाट राजा त कसैलाई राजाबाट रङ्क, कसैलाई पदासीन गरिराखेको छ त कसैलाई तल गिराइराखेको छ तथा कसैलाई नास्तिक एवं नास्तिकलाई आस्तिक गरिराखेको छ आदि । संक्षेपमा संसारमा यो सब परिवर्तन उसैका आदेश तथा इच्छाले भइराखेको छ तथा रात-दिनको कुनै यस्तो क्षण छैन जो त्यसको क्रियाशीलताबाट शून्य छ ।

[४]तथा यति महान शक्ति प्रत्येक समय भक्तहरुका काममा लागिरहनु अति ठूलो कृपा हो ।

[५]यसको अर्थ यो होइन कि अल्लाहलाई अवकाश छैन, बरु यो महावराको रुपमा भनिएको छ, जसको उद्देश्य धम्की दिनु तथा गाली गर्नु हो । ثَقَلَان सकलान (जिन्न तथा इन्सानलाई) यसकारण भनिएको छ कि उनलाई पालनाको लागि बाध्य गरिएको छ । यस प्रतिबन्ध तथा बोझबाट अन्य सृष्टि अलग छन् ।

[६]यो धम्की पनि उपकार हो कि यसबाट दुराचरी दुराचारहरुबाट रोकियून् तथा सदाचारीहरु अधिक पुण्य कमाऊन् ।

إِلَّا بِسُلْطَٰنٍ ﴿٣٣﴾

(एवं शक्ति) के तिमी निस्कन सक्दैनौ ।[1]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٣٤﴾

(३४) अनि तिमी आफ्ना प्रभुका कुन-कुन कुराहरुलाई झुठ्लाउनेछौ ?

يُرْسَلُ عَلَيْكُمَا شُوَاظٌ مِّن نَّارٍ وَنُحَاسٌ فَلَا تَنتَصِرَانِ ﴿٣٥﴾

(३५) तिमीमाथि अग्निको ज्वाला तथा धूँवा छोडिनेछ[2] अनि तिमी मुकाबिला गर्नसक्ने छैनौ ।[3]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٣٦﴾

(३६) त तिमी आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ।

فَإِذَا انشَقَّتِ السَّمَاءُ فَكَانَتْ وَرْدَةً كَالدِّهَانِ ﴿٣٧﴾

(३७) अनि जबकि आकाश फाटेर रातो भइहाल्नेछ, जस्तो कि रातो (नरम) छाला होस् ।[4]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٣٨﴾

(३८) त त्यसपछि तिमी आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

فَيَوْمَئِذٍ لَّا يُسْأَلُ عَن ذَنبِهِ إِنسٌ وَلَا جَانٌّ ﴿٣٩﴾

(३९) त्यसदिन कुनै मनुष्य तथा जिन्नसित त्यसका पापहरुको सोधपूछ गरिने छैन ।[5]

[1]अल्लाहद्वारा लेखिएको भाग्य तथा निर्णयबाट बाँचेर तिमी कहीं भाग्न सक्दछौ भने गइहाल, किन्तु यो शक्ति कसमा छ ? तथा भागेर जान्छ कहाँ ? कुनै स्थान यस्तो छैन जो अल्लाहका अधिकारभन्दा बाहिर छ ? यो पनि धम्की हो जो उपरोक्त धम्कीका समान उपकार हुन् । केही विद्वानहरुले भने कि यो महशरका मैदानमा भनिनेछ जब फरिश्ताहरु हरेक तर्फबाट मानिसहरुलाई घेरेर राखेका हुनेछन् । दुबै भावार्थ आफ्ना ठाउँमा सही छन् ।

[2]अभिप्राय यो हो कि यदि तिमी क़ेयामतका दिन कहीं भागेर गए पनि त फरिश्ताहरुले तिमीलाई अग्नि-ज्वाला तथा धूँवा छाडेर अथवा पग्लेको ताँबा तिम्रा टाउकाहरुमा हालेर फिर्ता ल्याउनेछन् । नुहासको अर्को अर्थ पग्लेको ताँबा गरिएको छ ।

[3]अर्थात् अल्लाहका प्रकोपलाई ल्याउन तिमी सामर्थ्य राख्ने छैनौ ।

[4]केयामत (प्रलय) का दिन आकाश फाटिहाल्नेछ । धर्तीमा फरिश्ताहरु उत्रनेछन् त्यसदिन यो धर्ती नरक़को अग्निका कडा तापले पग्लेर रातो चमडा (छाला) का समान हुनेछ । دهان रातो छाला ।

[5]अर्थात् जुन समय उनीहरु कब्रहरुबाट निस्कनेछन्, अन्यथा तत्पश्चात हिसाब स्थलमा उनीसित सोधपूछ गरिनेछ । केही ज्ञाताहरुले यसको भावार्थ यो गरेका छन् कि पापहरुका सन्दर्भमा सोधिने छैन, किनकि उनको त पूरा रेकर्ड नै फरिश्ताहरुको पासमा हुनेछ तथा अल्लाहका ज्ञानमा पनि । हो, यो सोधिनेछ कि तिमीले यो

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٤٠﴾

(४०) अनि तिमी आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

يُعْرَفُ الْمُجْرِمُونَ بِسِيمَاهُمْ فَيُؤْخَذُ بِالنَّوَاصِي وَالْأَقْدَامِ ﴿٤١﴾

(४१) पापी केवल आफ्ना हुलियाबाट नै चिनिहालिनेछन्[1] तथा उनका मायाहरुका कपाल तथा खुट्टा पकडिनेछन् ।[2]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٤٢﴾

(४२) अनि तिमी आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

هَٰذِهِ جَهَنَّمُ الَّتِي يُكَذِّبُ بِهَا الْمُجْرِمُونَ ﴿٤٣﴾

(४३) यो हो त्यो नरक जसलाई अपराधी असत्य मान्थे ।

يَطُوفُونَ بَيْنَهَا وَبَيْنَ حَمِيمٍ آنٍ ﴿٤٤﴾

(४४) त्यसका तथा गरम उम्लिराखेका पानीका मध्ये चक्कर खानेछन् ।[3]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٤٥﴾

(४५) त त्यसपछि तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

وَلِمَنْ خَافَ مَقَامَ رَبِّهِ جَنَّتَانِ ﴿٤٦﴾

(४६) तथा त्यस व्यक्तिका लागि जो आफ्ना प्रभुका समक्ष उभिने कुरोबाट तर्स्यो, दुई स्वर्ग छन् ।[4]

किन गर्‍यौ ? अथवा अभिप्राय यो हो कि उनीसित सोधिने छैन बरु मानव-अङ्ग स्वयं नै बोलेर सबै कुरा भन्नेछन् ।

[1]अर्थात् जुनप्रकार ईमान भएकाहरुको चिन्ह हुनेछ कि उनका वजूका अङ्ग टल्किराखेका हुनेछन्, त्यसैप्रकार पापीहरुका मुख काला हुनेछन्, आँखाहरु नीलो तथा उनी भयभीत हुनेछन् ।

[2]फरिश्ताहरु उनका मस्तक तथा उनका खुट्टाहरुलाई साथ मिलाएर समात्नेछन् तथा नरकमा हुर्‍याइदिनेछन्, अथवा कहिले मस्तकहरुबाट तथा कहिले खुट्टाहरुबाट उनलाई समात्नेछन् ।

[3]अर्थात् कहिले उनलाई नरकको यातना दिइनेछ, कहिलेउम्लिराखेको पानीको । آن (आन) गरम अर्थात् कडा उम्लिराखेको गरम पानी, जसले उनका आन्द्राहरुलाई काटिदिनेछ ।

[4]हदीसमा वर्णित छ कि दुई बगैंचा चाँदीका छन् जसका बर्तन (भाँडा) तथा सबैकुरा चाँदीका हुनेछन् तथा दुई बगैंचाहरु सुनका छन् तथा त्यसका वर्तन एवं वस्तुहरु सुनका हुनेछन् । (सहीह बुख़ारी, तफ़सीर सूरः अर्रहमान) केही कथनहरु (हदीसहरु) मा छ कि सुनका बगैंचा विशेष ईमानवालाहरु (समीपवर्तीहरु) का लागि हुनेछन् तथा चाँदीका बगैंचा साधारण ईमानवालाहरुका लागि हुनेछन् । (इब्ने कसीर)

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٤٧﴾

(४७) त त्यसपछि आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई तिमीले झुठ्लाउनेछौ ?

ذَوَاتَا أَفْنَانٍ ﴿٤٨﴾

(४८) दुबै स्वर्ग अत्याधिक डालाहरु (एवं) शाखाहरु (भएका) छन् ।[1]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٤٩﴾

(४९) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

فِيهِمَا عَيْنَانِ تَجْرِيَانِ ﴿٥٠﴾

(५०) ती दुबै (स्वर्गहरु) मा दुई प्रवाहित जलस्रोत छन् ।[2]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٥١﴾

(५१) त तिमी आफ्ना प्रभुका कुन-कुन चाहिं उपहारहरुलाई झुठ्लाउनेछौ ?

فِيهِمَا مِن كُلِّ فَاكِهَةٍ زَوْجَانِ ﴿٥٢﴾

(५२) यी दुबै (स्वर्गहरु) मा हरेक प्रकारका फलहरुका जोडा (दुई प्रकार) हुनेछन् ।[3]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٥٣﴾

(५३) अनि तिमी आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

مُتَّكِئِينَ عَلَىٰ فُرُشٍ بَطَائِنُهَا مِنْ إِسْتَبْرَقٍ ۚ وَجَنَى الْجَنَّتَيْنِ دَانٍ ﴿٥٤﴾

(५४) स्वर्गमा रहनेहरु यस्ता फर्शहरुमा तकिया लगाएका हुनेछन् जसका स्तर सुन्दर आकर्षक रेशमका हुनेछन्,[4] तथा ती दुबै स्वर्गका फलहरु अति निकट हुनेछन् ।[5]

[1]यो संकेत हो कि त्यसमा छायाँ बाक्लो तथा गहन हुनेछ साथै फलहरुको अधिकता हुनेछ, किनकि भन्दछन् कि प्रत्येक हाँगा तथा शाखा फलहरुबाट भरिएको हुनेछ । (इब्ने कसीर)

[2]एकको नाम 'तस्नीम' दोस्रोको नाम 'सल्सबील' छ ।

[3]अर्थात् स्वादमा प्रत्येक फल दुई प्रकारको हुनेछ, यो विशेष कृपाको एक रुप हो । केही विद्वानहरुले भने कि एक प्रकार शुष्क फलको तथा दोस्रो ताज़ा फलको हुनेछ ।

[4]अर्थात् माथिको कपडा स्तरभन्दा सधैं उत्तम तथा सुन्दर हुन्छ । यहाँ केवल स्तरको वर्णन छ जसको अभिप्राय यो हो कि माथिको कपडा त्यसभन्दा कैयन् अधिक उत्तम हुनेछ ।

[5]यति समीप हुनेछन् कि बस्दा-सुत्दा पनि भाँच्न सक्नेछन् ﴿قُطُوفُهَا دَانِيَةٌ﴾ (अल-हाक्क:-२३)

(५५) अनि तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٥٥﴾

(५६) त्यहाँ (लजालु) तलतिर दृष्टि भएका हूरहरु (सुन्दरी) छन्,[१] जसलाई उनीभन्दा पूर्व कुनै जिन्न तथा मनुष्यले हात लगाएको हुनेछैन ।[२]

فِيهِنَّ قَاصِرَاتُ الطَّرْفِ لَمْ يَطْمِثْهُنَّ إِنسٌ قَبْلَهُمْ وَلَا جَانٌّ ﴿٥٦﴾

(५७) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٥٧﴾

(५८) ती (हूरहरु) मणि एवं मूँगाका समान हुनेछन् ।[३]

كَأَنَّهُنَّ الْيَاقُوتُ وَالْمَرْجَانُ ﴿٥٨﴾

(५९) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٥٩﴾

(६०) उपकारको बदला उपकार (प्रतिफल) का अतिरिक्त के छ ।[४]

هَلْ جَزَاءُ الْإِحْسَانِ إِلَّا الْإِحْسَانُ ﴿٦٠﴾

---

[१]अर्थात् जसका दृष्टिहरु आफ्ना पतिहरुका अतिरिक्त कसैमाथि पर्ने छैनन् तथा उनीहरुलाई आफ्ना पति नै सबभन्दा सुन्दर तथा राम्रा लाग्नेछन् ।

[२]अर्थात् कुमारी हुनेछन् । यसभन्दा पहिला उनी कसैका विवाहमा गएकी हुनेछैन । यो आयत तथा यसभन्दा पहिलाका केही आयतहरुमा स्पष्ट रुपमा विदित हुन्छ कि जो जिन्न ईमान भएका हुनेछन् उनी पनि ईमान भएका मनुष्यहरुको जस्तै स्वर्गमा जानेछन्, तथा उनका लागि पनि त्यही हुनेछ जो अन्य ईमान भएकाहरुका लागि हुनेछ ।

[३]अर्थात् सफाईमा उत्कृष्ट तथा सफेदी लालीमा मोती अथवा मूँगाका सदृश्य हुनेछन् । जस्तै सहीह हदीसहरुमा पनि उनको सुन्दरता तथा शोभालाई यी शब्दहरुमा वर्णन गरिएको छ । «يُرَى مُخُّ سُوقِهِنَّ مِن وَّرَاءِ الْعَظْمِ وَاللَّحْمِ» "उनको शोभा तथा सौन्दर्यका कारण उनको पिडुलीको गुदा, मासु तथा हड्डीका बाहिरबाट झल्केको हुनेछ ।" (सहीह बुख़ारी, किताबु बदइल ख़ल्के, बाबु माजाअ फी सिफ़तिल जन्नते, मुस्लिम, किताबुल जन्नते व सिफ़ते नईमिहा, बाबु अव्वले जुमरतिन तदखुलुल जन्न:....) एक अर्को हदीसमा भनिएको छ कि स्वर्गवासीहरुका पत्नी यति सुन्दर हुनेछन् कि यदि उनीहरुमध्ये एउटा नारी जगत्वासीहरुतिर हेर्छ भने आकाश तथा धर्तीका मध्येको सबै भाग प्रकाशित हुनजान्छ तथा सुगन्धले भरिन्छ तथा त्यसका टाउकाका दुपट्टा यति मुल्यवान हुनेछ कि त्यो जगत् तथा त्यसमा जे-जति छ, त्यसभन्दा उत्तम छ । (सहीह बुख़ारी, किताबुल जिहाद, बाबुल हुरिल ईन)

[४]पहिला एहसानबाट अभिप्राय पुण्य कर्म तथा अल्लाहको आज्ञाको पालना हो तथा दोस्रो एहसानसित त्यसको प्रतिफल अर्थात् स्वर्ग तथा त्यसका सुख-सुविधाहरु हुन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٦١﴾
(६१) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारलाई झुठ्लाउनेछौ ?

وَمِن دُونِهِمَا جَنَّتَانِ ﴿٦٢﴾
(६२) तथा उनका अतिरिक्त दुई स्वर्ग अरु छन् ?[१]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٦٣﴾
(६३) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

مُدْهَامَّتَانِ ﴿٦٤﴾
(६४) जो दुबै बाक्ला हरिया रङ्गका कालिमाले परिपूर्ण छन् ।[२]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٦٥﴾
(६५) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

فِيهِمَا عَيْنَانِ نَضَّاخَتَانِ ﴿٦٦﴾
(६६) तिनीहरुमा दुई (तीब्र गतिले) उफ्रदै बग्नेवाला जलस्रोत छन् ।[३]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٦٧﴾
(६७) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारहरुलाई झुठ्लाउनेछौ ?

فِيهِمَا فَاكِهَةٌ وَنَخْلٌ وَرُمَّانٌ ﴿٦٨﴾
(६८) ती दुबैमा फलहरु तथा खजूर एवं अनार हुनेछन् ।[४]

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٦٩﴾
(६९) त के अहिले पनि तिमी दुबै आफ्ना प्रभुका कुनै उपहारलाई झुठ्लाउनेछौ ?

فِيهِنَّ خَيْرَاتٌ حِسَانٌ ﴿٧٠﴾
(७०) तिनीहरुमा सचरित्र सुन्दर स्त्रीहरु छन् ।[५]

---

[१] دُونِهِمَا सित यो अर्थ पनि निकालिएको छ कि यी दुई बाग़ श्रेष्ठता तथा प्रधानतामा पहिलो दुई बाग़हरुभन्दा, जसको चर्चा आयत नं.-४६ मा गुज्रयो, कम हुनेछ ।

[२]सिंचाईको अधिकता तथा हरियालीका कारण कार्यमा युक्त हुनेछन् ।

[३]यो विशेषण تَجْرِيَانِ भन्दा हल्का छ । الجَرْيُ أَقْوَى مِنَ النَّضْخِ "प्रवाह सिंचाइभन्दा अधिक राम्रो हुन्छ ।" (इब्ने क़सीर)

[४]जबकि पहिला दुई स्वर्गहरु (बाग़हरु) को विशेषताको वर्णन गरिएको छ कि हरेक फल दुई प्रकारको हुनेछ । स्पष्ट छ कि यसमा श्रेष्ठता एवं कृपाको अधिकता छ, त्यो दोस्रो कुरोमा छैन।

[५] خَيْرَاتٌ सित तात्पर्य आचरण तथा स्वभावका राम्रा कुराहरु हुन् तथा حِسَانٌ को अर्थ सुन्दरता तथा शोभामा अद्वितीय ।

| | |
|---|---|
| (७१) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहाररहरुलाई झुठ्लाउनेछौ ? | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٧١﴾ |
| (७२) (गोरो रङ्गका) हूरहरु (अप्सराहरु) स्वर्गका खेमाहरु (पालहरु) मा रहनेहरु हुन् ।[1] | حُورٌ مَقْصُورَاتٌ فِي الْخِيَامِ ﴿٧٢﴾ |
| (७३) त (हे मनुष्य एवं जिन्नहरु !) तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहाररहरुलाई झुठ्लाउनेछौ ? | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٧٣﴾ |
| (७४) ती (हूरहरु) लाई कुनै मनुष्य अथवा जिन्नले यसभन्दा पहिला हात लगाएन (उनीसँग भेटेन) | لَمْ يَطْمِثْهُنَّ إِنْسٌ قَبْلَهُمْ وَلَا جَانٌّ ﴿٧٤﴾ |
| (७५) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारलाई झुठ्लाउनेछौ ? | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٧٥﴾ |
| (७६) हरिया डसनाहरु तथा सुन्दर ओछ्यानहरुमा तकिया लगाएका हुनेछन् ।[2] | مُتَّكِئِينَ عَلَىٰ رَفْرَفٍ خُضْرٍ وَعَبْقَرِيٍّ حِسَانٍ ﴿٧٦﴾ |
| (७७) त तिमी दुबै आफ्ना प्रभुका कुन-कुन उपहारलाई झुठ्लाउनेछौ ?[3] | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٧٧﴾ |

[1]हदीसमा नबी सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो : "स्वर्गमा मोतीहरुका खेमा (पालहरु) हुनेछन् । उनको चौडाइ साठ्ठी मील हुनेछ । त्यसका प्रत्येक कुनामा जन्नतिका परिवार हुनेछन्, जसलाई दोस्रो कुनामा भएकाले देख्न सक्ने छैनन् । ईमानवाला त्यसमा घुम्ने, डुल्ने छ ।" (सहीह बुख़ारी, तफ़सीर सूर: रहमान तथा किताबु बदइल ख़ल्क, बाबु माजाअ फी सिफ़तिल जन्नते, सहीह मुस्लिम, किताबुल जन्नते, बाबुन फी सिफ़ते ख़ेयामिल जन्नते)

[2] رَفْـرَف (रफ़रफ़) गद्दा, गलैंचा अथवा यसप्रकारका उत्तम ओछ्यान, عَبْقَرِي (अबकरी) प्रत्येक उत्तम तथा मूल्यवान वस्तुलाई भनिन्छ । नबी सल्लल्लाहु अलैहि व सल्लमले यो शब्द आदरणीय उमराका लागि प्रयोग गर्नुभयो । «فَلَمْ أَرَ عَبْقَرِيًّا يَفْرِي فَرْيَهُ» "मैले कोही अबकरी (श्रेष्ठ) यस्तो देखिन जो जसले उमरको जस्तो काम गर्दछ ।" (सहीह अल-बुख़ारी, किताबुल मनाक़िब, बाबु फ़जले उमर तथा मुस्लिम, फ़ज़ायेलुस सहाबा, बाबुन मिन फ़ज़ाएले उमर) अभिप्राय यो हो कि जन्नति यस्ता तख्ताहरुमा आसीन हुनेछन् जसमा हरिया रङ्गका डसना, कालीनहरु तथा उच्च प्रकारका सुन्दर, कढाई भएका ओछ्यानहरु लगाइएका हुनेछन् ।

[3]यो आयत यस सूर: मा ३१ पटक आएको छ । अल्लाहले यस आयतमा आफ्ना विभिन्न प्रकारका उपहारहरुको चर्चा गर्नुभएको छ तथा प्रत्येक अथवा केही

تَبٰرَكَ اسْمُ رَبِّكَ ذِى الْجَلٰلِ وَالْاِكْرَامِ ﴿٧٨﴾

(७८) बडो शुभ छ तिम्रा प्रतापवान[1] तथा उदार प्रभुको नाम ।

سُوْرَةُ الْوَاقِعَةِ

## सूरतुल वाकिअः-५६

सूरः वाकिअः* मक्कामा अवतरित भएको तथा यसमा छयानब्बे आयतहरु एवं तीन रूकूअ छन् ।

उपकारहरुको पश्चात यो प्रश्न गर्नुभएको छ, यहाँसम्मकि महशरका मैदानको भयानकता तथा नरकको यातनाको पश्चात पनि यो प्रश्न गर्नुभएको छ, जसका अर्थ हो कि परलोकका कुराहरुको याद दिलाउनु पनि एउटा ठूलो दया हो ताकि बच्नेवालाहरु त्यसबाट बाँच्नुको प्रयास गरून् । दोस्रो कुरो यो ज्ञात भयो कि जिन्न पनि मानिसहरुको जस्तै एउटा सृष्टि हो वरु मानिसहरुका पश्चात यो दोस्रो सृष्टि हो जसलाई बुद्धि तथा बोध प्रदान गरिएको छ तथा त्यसको साटो उनीबाट केवल यही माग गरिएको छ कि उनीमात्र एक अल्लाहको उपासना गरून्, त्यसका साथ कसैलाई साभ्mी नबनाऊन् । सृष्टिमा यही दुईटा छन् जो धार्मिक आदेश तथा कर्तव्यहरुका उत्तरदायी हुन् । यसकारण उनीहरुलाई इरादा तथा इच्छाको स्वाधीनता दिइयो ताकि उनको परीक्षा हुनसकोस् । तेस्रो, उपहारहरुका वर्णनबाट यो पनि सिद्ध भयो कि अल्लाहका उपहारहरुबाट लाभ प्राप्त गर्नु उचित तथा राम्रो छ । यो संयम तथा सदाचारका प्रतिकूल छ न अल्लाहका साथ लगावमा बाधक, जस्तो कि केही सुफीहरु (साधु) विश्वास दिलाउँछन् । चौथो, पटक-पटक यो प्रश्न कि तिमी अल्लाहका कुन-कुन चाहिं अनुकम्पाहरुलाई भ्mुठ्लाउनेछौ, यो धम्की तथा चेतावनीस्वरुप छ, जसको उद्देश्य त्यस अल्लाहको अवज्ञाबाट रोक्नु हो जसले यो सबै कुराहरु पैदा गर्‍यो तथा सुलभ गरायो । यसैकारण नबी सल्लल्लाहु अलैहि व सल्लमले यसका उत्तरमा यो पढ्नु पसन्द गर्नुभएको छ, «لاَ بِشَيْءٍ مِنْ نِعَمِكَ رَبَّنَا نُكَذِّبُ فَلَكَ الْحَمْدُ» "हे हाम्रा प्रभु ! हामी तिम्रा कुनै पनि उपहारलाई भ्mुठ्लाउँदैनौं, तसर्थ सबै प्रशंसाहरु तिम्रै लागि छन् ।"

[1] تَبَارَكَ (तबारक) बरकतबाट छ, जसको अर्थ नित्यता तथा स्थिरता हो । अभिप्राय यो हो कि त्यसको नाम सधैं रहनेछ अथवा त्यसका पास सधैं भलाईका कोष छन् केही धर्मविदहरुले यसको उँचाई तथा समानता गरेका छन्, तथा जब उसको नाम यति मङ्गलमय अर्थात् भलाई तथा उचाईवाला छ त त्यो स्वयं कति शुभ, बडाई तथा ऊचाईवाला होला ?

*यस सूरःका विषयमा प्रख्यात छ कि यो सूरतुल ग़िना (सम्पन्नताको सूरः) हो तथा जो व्यक्ति यसलाई प्रत्येक रात्रि पढ्नेछ त्यसलाई कहिल्यै भोकमरी आउने छैन । किन्तु वास्तवमा यस सूरःका महत्वमा कुनै प्रमाणित हदीस छैन । प्रत्येक राति पढ्नु तथा बच्चाहरुलाई सिकाउनुको हदीसहरु पनि अप्रमाणित बरु बनावटी छन् । हेर्नुस (अल-अहादीसुज़ ज़ईफ़ा लिल अलबानी हदीस नं. २८९, २९० भाग १/४५७)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु एवं अत्यन्त दयालु छ ।

إِذَا وَقَعَتِ الْوَاقِعَةُ ﴿١﴾

(१) जब केयामत (प्रलय) स्थापित भइहाल्नेछ ।[1]

لَيْسَ لِوَقْعَتِهَا كَاذِبَةٌ ﴿٢﴾

(२) जसको घटित हुने कुरोमा कुनै झुठ छैन ।

خَافِضَةٌ رَّافِعَةٌ ﴿٣﴾

(३) त्यो ऊँच-नीच गर्नेवाली हुनेछ ।[2]

إِذَا رُجَّتِ الْأَرْضُ رَجًّا ﴿٤﴾

(४) जबकि धर्ती भूकम्पका साथ हल्लाइदिनेछ ।

وَّبُسَّتِ الْجِبَالُ بَسًّا ﴿٥﴾

(५) तथा पर्वत पूर्णरुपमा कण-कण गरिदिइनेछन् ।[3]

فَكَانَتْ هَبَاءً مُّنْبَثًّا ﴿٦﴾

(६) अनि त्यो छरिएको धूलको जस्तो हुनेछ ।

وَّكُنْتُمْ أَزْوَاجًا ثَلٰثَةً ﴿٧﴾

(७) तथा तिमी तीन गुटहरुमा बाँडिनेछौ ।[4]

فَأَصْحٰبُ الْمَيْمَنَةِ مَا أَصْحٰبُ الْمَيْمَنَةِ ﴿٨﴾

(८) दाहिना हातवालाहरु, अनि तिनीहरु (दाहिना हातवालाहरु) कति राम्रा छन्, ।[5]

وَأَصْحٰبُ الْمَشْئَمَةِ مَا أَصْحٰبُ الْمَشْئَمَةِ ﴿٩﴾

(९) तथा बायाँ हातवाला, के हाल छ बायाँ हातवालाहरुको ।[6]



[1]वाकेआ पनि क़ियामतका नामहरुमध्ये हो । किनकि यसलाई व्याप्त हुनु नै आवश्यक छ यसकारण यसको यो नाम पनि हो ।

[2]ऊँच-नीच सित अभिप्राय आदर तथा अपमान हो । अर्थात् अल्लाहका आज्ञाकारी भक्तहरुलाई यसले उच्च तथा अवज्ञाकारीहरुलाई नीचा गर्नेछ, चाहे संसारमा मामिला यसका विपरीत होऊन् । ईमान भएकाहरु त्यहाँ सम्मानित हुनेछन् तथा काफ़िर एवं अवज्ञाकारी हीन तथा अपमानित ।

[3]رَجًّا (रज्जा) को अर्थ गति तथा हलचल (भूकम्प) हो, तथा بَسًّا (बस्सा) को अर्थ कण-कणमा भइहाल्नु हो ।

[4]أَزْوَاجًا (अज़वाजा) أَصْنَافًا (असनाफ़ा) का अर्थमा छ ।

[5]यसबाट साधारण ईमानवाला तात्पर्य छन् जसलाई उनका कर्मपत्र दायाँ हातमा दिइनेछन्, जो उनका सौभाग्यको परिचारक हुनेछ ।

[6]यसबाट अभिप्राय काफ़िर हुन्, जसलाई उनका कर्मपत्र बायाँ हातमा दिइनेछन् ।

وَالسّٰبِقُوْنَ السّٰبِقُوْنَ ⑩

(१०) तथा जो अग्रिम छन् उनी त अग्रिम नै छन् ।[1]

اُولٰٓئِكَ الْمُقَرَّبُوْنَ ⑪

(११) उनी पूर्ण निकटता प्राप्त गरेका छन् ।

فِيْ جَنّٰتِ النَّعِيْمِ ⑫

(१२) सुख-सुविधाहरु भएका स्वर्गहरुमा छन् ।

ثُلَّةٌ مِّنَ الْاَوَّلِيْنَ ⑬

(१३) (निकै ठूलो) गुट त पहिला मानिसहरुमध्ये हुनेछ ।

وَقَلِيْلٌ مِّنَ الْاٰخِرِيْنَ ⑭

(१४) तथा थोरै पछिल्ला मानिसहरुमध्ये ।[2]

عَلٰى سُرُرٍ مَّوْضُوْنَةٍ ⑮

(१५) यी मानिसहरु स्वर्गका ताराहरुले बुनिएका तख्ताहरुमा ।

[1]यिनीबाट अभिप्राय विशेष ईमानवालाहरु हुन् । यो तेस्रो प्रकार हो, जो ईमान स्वीकार गर्नमा अग्रिम तथा पुण्यका कार्यहरुमा बढी-चढी भाग लिनेवाला हुन्, अल्लाहले उनीहरुलाई विशेष समीपता प्रदान गर्नेछ । यो वाक्य यस्तो नै छ जस्तै बोल्दछन् कि तिमी तिमी हौ तथा ज़ैद ज़ैद, यसमा जस्तो कि ज़ैदको महत्व तथा त्यसको प्रधानताको वर्णन छ ।

[2]ثُلَّةٌ(सुल्ल:) त्यस ठूलो गिरोहलाई भनिन्छ जसको गणना असम्भव होस् । भनिन्छ कि पहिला मानिसहरुसित अभिप्राय आदरणीय आदमसित लिएर नबी सल्लल्लाहु अलैहि व सल्लम सम्मका समुदायका मानिस हुन् तथा पछिल्लासित उहाँ सल्लल्लाहु अलैहि व सल्लमका सम्प्रदायका मानिसहरु । अभिप्राय यो हो कि पहिलाका समुदायहरुमा अग्रिम मानिसहरुको एउटा ठूलो गिरोह छ, किनकि उनको युग निकै लामो छ जसमा पहिलाका हजारौं अम्बिया सम्मिलित छन् । उनका मुक़ाबिलामा उम्मते मुहम्मदिया (मुहम्मदी समुदाय) को युग (क़्यामतसम्म) थोरै छ, अत: उनमा उग्रगामी पनि विगत समुदायहरुका सापेक्ष थोरै हुनेछन् । तथा एक हदीसमा जो आउँछ कि नबी सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो कि मलाई आशा छ कि तिमी जन्नतिहरुका आधा हुनेछौ । (सहीह मुस्लिम नं.२००) त यो उपरोक्त आयतका अर्थका प्रतिकूल छैन, किनकि उम्मते मुहम्मदियाका अग्रगामीहरु तथा साधारण मोमिनहरुलाई मिलाएर शेष सबै समुदायहरुबाट स्वर्गमा जानेहरुको आधा भइहाल्नेछ । अत: केवल विगत समुदायहरुका अग्रगामीहरुको अधिकताले हदीसमा वर्णित संख्याको इन्कार हुनेछैन । किन्तु यो कुरा विचारणीय छ तथा केही ज्ञाताहरुले पहिला तथा पछिल्लाहसित यसै मुहम्मदी समुदायका मानिसहरु तात्पर्य लिएका छन् । अर्थात् यसका पहिला मानिसहरुमा अगाडीवालाहरुका संख्या अधिक तथा पछिल्लोमा कम हुनेछ ।इमाम इब्ने क़सीरले यसै दोस्रो कथनलाई प्राथमिकता दिनुभएको छ । यो मध्यवर्ती वाक्य हो, عَلٰى سُرُرٍ مَّوْضُوْنَةٍ तथा فِيْ جَنّٰتِ النَّعِيْمِ का मध्य ।

مُّتَّكِـِٕيْنَ عَلَيْهَا مُتَقٰبِلِيْنَ ﴿١٦﴾
(१६) एक-अर्काका सामु तकिया लगाई बसेका हुनेछन् ।[1]

يَطُوْفُ عَلَيْهِمْ وِلْدَانٌ مُّخَلَّدُوْنَ ﴿١٧﴾
(१७) उनका निकट यस्ता केटाहरु जो सधैं (केटा नै) रहनेछन्,[2] आवागमन गर्नेछन् ।

بِاَكْوَابٍ وَّاَبَارِيْقَ ۙ وَكَاْسٍ مِّنْ مَّعِيْنٍ ﴿١٨﴾
(१८) प्याला तथा सुराही लिएर तथा मदिराको प्याला लिएर जो प्रवाहित मदिराले भरिएको हुन्छ ।

لَّا يُصَدَّعُوْنَ عَنْهَا وَلَا يُنْزِفُوْنَ ﴿١٩﴾
(१९) जसबाट न टाउकोमा चक्कर हुन्छ तथा न बुद्धि भ्रष्ट हुन्छ ।[3]

وَفَاكِهَةٍ مِّمَّا يَتَخَيَّرُوْنَ ﴿٢٠﴾
(२०) तथा यस्ता फलहरु लिएका हुनेछन् जसलाई उनीहरुले मन पराउँछन् ।

وَلَحْمِ طَيْرٍ مِّمَّا يَشْتَهُوْنَ ﴿٢١﴾
(२१) तथा पंक्षीहरुका मासु जो उनीहरुलाई (अत्यन्त) रुचिकर हुन्छ ।

وَحُوْرٌ عِيْنٌ ﴿٢٢﴾
(२२) तथा ठूला-ठूला आँखा भएका हूरहरु ।

كَاَمْثَالِ اللُّؤْلُؤِ الْمَكْنُوْنِ ﴿٢٣﴾
(२३) जो लुकेका मोतीहरुका जस्तै छन् ।[4]

جَزَآءًۢ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿٢٤﴾
(२४) यो प्रतिफल हो उनका कर्महरुको ।

لَا يَسْمَعُوْنَ فِيْهَا لَغْوًا وَّلَا تَاْثِيْمًا ﴿٢٥﴾
(२५) न (उनीहरु) त्यहाँ व्यर्थका कुरा सुन्नेछन् तथा न पापको कुरा ।

[1] مَوْضُوْنَةٍ बुनिएका तथा जडिएका, अर्थात् उक्त जन्नति सुनका ताराहरुले बुनेका तथा जवाहिरहरुले जडिएका तख्ताहरुमा एक-अर्काका सामु तकियाहरुमा आसीन हुनेछन् ।

[2] अर्थात उनी ठूला हुने छैनन् कि बुढा हुन जाउन्, न उनका रुपरेखा तथा आकारमा कुनै परिवर्तन हुनेछ, बरु एउटै आयु तथा अवस्थामा रहनेछन्, जस्तै नव आयु वालक हुन्छन् ।

[3] صُدَاعٌ (सुदाअ) टाउकोको यस्तो पिडालाई भन्दछन् जो मदिराका नशाका कारण हुन्छ । إِنْزَافٌ (इनज़ाफ़) को अर्थ त्यो बुद्धिको बिगाड हो जो नशाको कारण हुन्छ । संसारको मदिरामा यी दुबै कुरा हुन्छन् । परलोकको मदिरामा आनन्द तथा स्वाद त अवश्य हुनेछ किन्तु यी ख़राबीहरु हुनेछैन । مَعِيْنٍ (मईन) प्रवाहित स्रोत जो सुक्दैनन् ।

[4] مَكْنُوْنٌ (मक्नून) जसलाई लुकाएर राखिएको होस्, उसलाई कसैको हातमा लागेको होस्, न धूल-कण पुगेको होस् । यस्तो वस्तु पूर्णत: स्वच्छ तथा मूल स्थितिमा रहन्छ ।

| | |
|---|---|
| إِلَّا قِيلًا سَلَٰمًا سَلَٰمًا ۝٢٦ | (२६) केवल सलाम नै सलाम (शान्ति नै शान्ति) को ध्वनि हुनेछ ।[1] |
| وَأَصْحَٰبُ ٱلْيَمِينِ مَآ أَصْحَٰبُ ٱلْيَمِينِ ۝٢٧ | (२७) तथा दाहिने हातवाला, कति राम्रा छन् दाहिने हातवाला ।[2] |
| فِى سِدْرٍ مَّخْضُودٍ ۝٢٨ | (२८) उनीहरु काँडाहरु नभएका बैर, |
| وَطَلْحٍ مَّنضُودٍ ۝٢٩ | (२९) तथा गुच्छादार किल्लाहरु, |
| وَظِلٍّ مَّمْدُودٍ ۝٣٠ | (३०) तथा लामा-लामा छायाँहरु,[3] |
| وَمَآءٍ مَّسْكُوبٍ ۝٣١ | (३१) तथा प्रवाहित जल, |
| وَفَٰكِهَةٍ كَثِيرَةٍ ۝٣٢ | (३२) तथा अत्याधिक फलहरुमा, |
| لَّا مَقْطُوعَةٍ وَلَا مَمْنُوعَةٍ ۝٣٣ | (३३) जो न समाप्त हुन्छन्, न रोकिन्छन्,[4] |
| وَفُرُشٍ مَّرْفُوعَةٍ ۝٣٤ | (३४) तथा अग्ला-अग्ला फर्शहरुमा हुनेछन् ।[5] |

[1]अर्थात् संसारमा त आपसमा लडाईं-झगडा हुन्छन् । यहाँसम्मकि बहिनी-भाइ पनि यसबाट सुरक्षित छैनन् । यस मतभेद तथा झगडाले हृदयहरुमा मयल तथा कटुता उत्पन्न हुन्छ, जो एक-अर्काका विरुद्ध अपशब्द, गाली तथा चुगली आदिमा मानिसलाई उक्साउँछ । स्वर्ग ती तमाम नैतिक फोहोर एवं अशिष्टताले न केवल पवित्र हुनेछ परन्तु त्यहाँ सलाम नै सलामका ध्वनिहरु सुन्नमा आउनेछन्, फरिश्ताहरुको तर्फबाट पनि तथा परस्पर जन्नतिहरुबाट पनि । यसको अर्थ यो हो कि त्यहाँ सलाम तथा अभिवादन त हुनेछ किन्तु मन तथा कथनको ती खराबीहरु हुनेछैनन्, जो संसारमा सामान्य छन् यहाँसम्मकि ठूला-ठूला धार्मिक पुरुष पनि यिनीबाट सुरक्षित छैनन् ।

[2]अहिलेसम्म अग्रगामीहरुको वर्णन थियो । अब 'अस्हाबुल यमीन' देखि साधारण ईमान भएकाहरुको वर्णन भइराखेको छ ।

[3]जस्तो एक हदीसमा छ कि स्वर्गका एक रुखका छायाँमुनि एउटा घोडसवार सय सालसम्म चलिरहनेछ तैपनि त्यो छायाँ समाप्त हुनेछैन । (सहीह बुख़ारी, तफ़सीर सूरतिल वाक़िअः, सहीह मुस्लिम, किताबुल जन्नह, बाबुन इन्न फ़िल जन्नते शजरतुन्)

[4]अर्थात् यी फल सामयिक हुने छैनन् कि ऋतु गुज्रे पश्चात यी फल पनि आग़ामी ऋतुसम्म समाप्त हुन जानेछन् । यी फल यसप्रकार ऋतुसित आबद्ध हुने छैनन् बरु प्रत्येक ऋतुमा उपलब्ध हुनेछन् । यसप्रकार उनको प्राप्तिमा कुनै रुकावट हुने छैन ।

[5]केही विद्वानहरुले "फुरूश"सित पत्नीहरु तथा 'मर्फूआ' सित उच्च पदको भाव तात्पर्य लिएका छन् ।

إِنَّآ أَنشَأْنَٰهُنَّ إِنشَآءً ﴿٣٥﴾

(३५) हामीले उन (का पत्नीहरु) लाई विशेषरुपले बनाएका छौं ।

فَجَعَلْنَٰهُنَّ أَبْكَارًا ﴿٣٦﴾

(३६) तथा हामीले उनीहरुलाई कुमारीहरु बनाएका छौं ।[1]

عُرُبًا أَتْرَابًا ﴿٣٧﴾

(३७) प्रेम गर्नेहरु समान आयुका छन् ।[2]

لِّأَصْحَٰبِ ٱلْيَمِينِ ﴿٣٨﴾

(३८) दाहिने हातवालाहरुका लागि छन् ।

ثُلَّةٌ مِّنَ ٱلْأَوَّلِينَ ﴿٣٩﴾

(३९) (निकै) ठूला समूह छ अग्रणि मानिसहरु मध्येबाट ।[3]

وَثُلَّةٌ مِّنَ ٱلْءَاخِرِينَ ﴿٤٠﴾

(४०) तथा (निकै) ठूलो समूह छ पछिल्लाहरु मध्येबाट ।[4]

وَأَصْحَٰبُ ٱلشِّمَالِ مَآ أَصْحَٰبُ ٱلشِّمَالِ ﴿٤١﴾

(४१) तथा बायाँ हातवाला के हुन्; बायाँ हातवालाहरु ।[5]

---

[1] أَنشَأْنَٰهُنَّ मा सर्वनामका फर्कने ठाउँ यद्यपि समीप छैन किन्तु वाक्यक्रम त्यसलाई बताइसकेको छ कि यसबाट अभिप्राय जन्नतीहरुलाई प्राप्त हुने पत्नी तथा हूरहरु (अप्सराहरु) छन् । हूरहरु जन्मका सामान्य विधिले पैदा हुने छैनन् बरु अल्लाह तआलाले उनीहरुलाई स्वर्गमा आफ्ना विशेष सामर्थ्यले पैदा गर्नेछ तथा जो सांसारिक नारीहरु हुनेछन् तिनी पनि हूरहरुका अतिरिक्त जन्नतीहरुलाई पत्नीका रुपमा उपलब्ध हुनेछन् । यिनीहरुमा बूढी, काली, कुरुप जो पनि हुनेछन्, अल्लाहले उनलाई स्वर्गमा यौवन तथा सौन्दर्य एवं शोभाले अलंकृत गरिदिनेछ, न कोही बुढी हुनेछ न कुरुप, बरु सबै युवती एवं कुमारीका रुपमा हुनेछन् ।

[2] عُـرُبٌ, यो عَرُوبَةٌ को बहुवचन हो, अर्थात् यस्ता नारी जो आफ्नो सुन्दरता, शोभा एवं अन्य गुणहरुका कारण आफ्ना पतिको अत्यन्त प्रिय हुन्छन् । أَتْـرَابٌ यो تِرْبٌ को बहुवचन हो, समान आयु । अर्थात् जन्नतीहरुका पत्नी सबै एक आयुका हुनेछन्, जस्तो कि हदीसमा वर्णन गरिएको छ कि सबै जन्नती ३३ वर्षको आयुका हुनेछन् (तिर्मिजी बाब् माजाअ फी सिन्ने अहलिल जन्नते) यो पनि अभिप्राय हुनसक्छ कि आफ्ना पतिहरुका समान आयु हुनेछन् । दुबैको अभिप्राय एउटै छ ।

[3] अर्थात् आदम अलैहिस्सलामसित लिएर नबी सल्लल्लाहु अलैहि व सल्लम सम्मका मानिसहरुमध्ये अथवा स्वयं उहाँकि उम्मतका अघिल्लाहरु मध्येबाट ।

[4] अर्थात् नबी सल्लल्लाहु अलैहि व सल्लमको उम्मत मध्येबाट अथवा उहाँकी उम्मतका पछिल्लाहरु मध्येबाट ।

[5] यसबाट अभिप्राय नरकवासी हुन् जसलाई उनका कर्मपत्र बायाँ हातमा दिइनेछन्, जो उनका लेख दुर्भाग्यको लक्षण हुनेछ ।

فِيْ سَمُوْمٍ وَّحَمِيْمٍ ﴿٤٢﴾ (४२) गरम वायु तथा गरम जलमा (हुनेछन्) ।

وَّظِلٍّ مِّنْ يَّحْمُوْمٍ ﴿٤٣﴾ (४३) तथा काला धूवाँहरुको छायाँमा ।[1]

لَّا بَارِدٍ وَّلَا كَرِيْمٍ ﴿٤٤﴾ (४४) जो न शीतल छ, न सुखद ।[2]

اِنَّهُمْ كَانُوْا قَبْلَ ذٰلِكَ مُتْرَفِيْنَ ﴿٤٥﴾ (४५) निःसन्देह यी मानिस यसभन्दा पूर्व अत्यन्त सम्पन्नतामा पलेका थिए ।[3]

وَكَانُوْا يُصِرُّوْنَ عَلَى الْحِنْثِ الْعَظِيْمِ ﴿٤٦﴾ (४६) तथा महापापहरुमा दूराग्रह गर्दथे ।

وَكَانُوْا يَقُوْلُوْنَ ۙ اَئِذَا مِتْنَا وَكُنَّا تُرَابًا وَّعِظَامًا ءَاِنَّا لَمَبْعُوْثُوْنَ ﴿٤٧﴾ (४७) तथा भन्दथे कि जब हामी मरिहाल्नेछौं तथा माटो एवं हड्डी भइहाल्नेछौं, त के हामी पुनः जीवित गरी उभ्याइनेछौं ।

اَوَاٰبَآؤُنَا الْاَوَّلُوْنَ ﴿٤٨﴾ (४८) तथा के हाम्रा पूर्वज पनि ?[4]

قُلْ اِنَّ الْاَوَّلِيْنَ وَالْاٰخِرِيْنَ ﴿٤٩﴾ (४९) (तपाईं) भनिदिनुस् कि निःसन्देह सबै अघिल्ला तथा पछिल्लाहरु ।

[1] سَمُوم आगोको तपन (राफ) अथवा लूहको तपन जो शरीरका छिद्रहरुमा पसिहालोस् । حميم (हमीम) उम्लिराखेको पानी, يَحْمُوم (यहमूम) حَمَمَة (हिमम:) बाट छ । अर्थात काला । अत्याधिक काला हो त أحَمّ भनिन्छ । अभिप्राय यो हो कि नरकको यातनाबाट व्याकूल भएर उनी एउटा छायाँतिर दगुर्नेछन्, किन्तु जब त्यहाँ पुग्नेछन् त थाहा हुनेछ कि यो أحَمّ छायाँ होइन, यो नरकको अग्निको कालो धूवाँ हो । केही ज्ञाताहरु भन्छन् कि यो حُمَم (हम्म) बाट छ जो कोइलाको अर्थमा छ । यसैकारण इमाम ज़ह्हाक़ भन्नुहुन्छ : आगो पनि कालो छ तथा जहन्नमीहरु पनि काला मुख भएका हुनेछन् तथा नरक़मा जे-जति हुनेछ, कालो नै हुनेछ ।

[2] अर्थात् छायाँ शीतल हुन्छ, परन्तु यी जसका छायाँ समूह रहेका हुन्छन्, त्यो छायाँ हुनेछैन जो शीतल होस्, त्यो त नरकको धूवाँ हुनेछ । وَلا كَرِيم जसमा कुनै सदृश्य अथवा भलाई छैन ।

[3] अर्थात् संसारमा आख़िरत (परलोक) बाट विमुख भई आनन्दमा डुबेका थिए ।

[4] यसबाट विदित भयो कि परलोकका प्रति विश्वासका इन्कार नै कुफ्र, शिर्क तथा पापहरुमा लीन रहनुको मूल कारण हो । यही कुरो हो कि जब आख़िरतको कल्पना त्यसका मान्नेवालाहरुका विचारमा धमिलो हुनजान्छ त उनमा दूराचार एवं कुकर्म व्याप्त हुनजान्छ, जस्तो आजकल साधारणतः मुसलमानहरुको दशा छ ।

(५०) अवश्य एकत्रित गरिनेछन् एउटा निर्धारित दिनका समय ।

لَمَجْمُوعُونَ إِلَىٰ مِيقَاتِ يَوْمٍ مَّعْلُومٍ ۝٥٠

(५१) अनि तिमी हे मार्ग विचलितहरु, झुठ्लाउनेहरु !

ثُمَّ إِنَّكُمْ أَيُّهَا الضَّالُّونَ الْمُكَذِّبُونَ ۝٥١

(५२) अवश्य खानेवाला छौ ज़क्कूम (कैक्टस्) का वृक्ष ।

لَآكِلُونَ مِن شَجَرٍ مِّن زَقُّومٍ ۝٥٢

(५३) तथा त्यसैबाट पेट भर्नेवाला छौ ।[1]

فَمَالِئُونَ مِنْهَا الْبُطُونَ ۝٥٣

(५४) अनि त्यसमाथि गरम उम्लिराखेको पानी पिउनेवाला छौ ।

فَشَارِبُونَ عَلَيْهِ مِنَ الْحَمِيمِ ۝٥٤

(५५) अनि पिउनेवाला पनि तिर्खाएका ऊटहरुको जस्तो ।[2]

فَشَارِبُونَ شُرْبَ الْهِيمِ ۝٥٥

(५६) केयामतका दिन उनको अतिथि-सत्कार यही हो ।[3]

هَٰذَا نُزُلُهُمْ يَوْمَ الدِّينِ ۝٥٦

(५७) हामीले नै तिमी सबैलाई पैदा गरेका छौं, अनि तिमी किन मान्दैनौ ?[4]

نَحْنُ خَلَقْنَاكُمْ فَلَوْلَا تُصَدِّقُونَ ۝٥٧

[1]अर्थात् त्यस कुदृश्य तथा अत्यन्त कुस्वाद एवं तितो वृक्षको खाना तिमीलाई यद्यपि अति अप्रिय हुनेछ, परन्तु अति भूखका कारण तिमीलाई त्यसैबाट आफ्नो पेट भर्नुपर्नेछ ।

[2] هِيمٌ (हीम) أَهْيَم को बहुवचन हो, ती तिर्खाएका ऊटहरुलाई भनिन्छ जो एक विशेष रोगका कारण पानी लगातार पिउँदै जान्छन् किन्तु उनको तिर्खा मेंटिदैंन । अभिप्राय यो हो कि ज़क्कूम खाएर पानी पनि त्यस्तै नै पिउने छैनौ जो साधारण ढङ्गले हुन्छ, वरु एक त यातनाका रुपमा तिमीलाई पिउनका लागि उम्लिराखेको पानी दिइनेछ, अर्कोतिर तिमी त्यसलाई तिर्खाएको ऊटका समान पिउँदै जानेछौ किन्तु तिम्रो तिर्खा मेटिन्न ।

[3]यो उपहास स्वरुप भन्नुभयो : अन्यथा अतिथि सत्कार त त्यो हुन्छ, जो अतिथिका आदर-भावका लागि गरिन्छ । जस्तै केही स्थानहरुमा भन्नुभयो :

﴿فَبَشِّرْهُم بِعَذَابٍ أَلِيمٍ﴾

"उनलाई दुखदायी यातनाको शुभ-सूचना सुनाइदेउ ।" (आले-इमरान-२१)

[4]अर्थात् तिमी जान्दछौ कि तिम्रो स्रष्टा अल्लाह नै हो, अनि तिमी त्यसलाई किन मान्दैनौ अथवा पुनः जीवन प्रदान गर्ने कुरामा विश्वास किन गर्दैनौ ?

أَفَرَءَيْتُم مَّا تُمْنُونَ ﴿٥٨﴾

(५८) त्यसो भए यो भन कि जुन वीर्य तिमी चुहाउँछौ ।

ءَأَنتُمْ تَخْلُقُونَهُۥٓ أَمْ نَحْنُ ٱلْخَٰلِقُونَ ﴿٥٩﴾

(५९) के त्यसबाट (मनुष्य) तिमी बनाउँछौ अथवा स्रष्टा हामी नै हौं ?[1]

نَحْنُ قَدَّرْنَا بَيْنَكُمُ ٱلْمَوْتَ وَمَا نَحْنُ بِمَسْبُوقِينَ ﴿٦٠﴾

(६०) हामीले नै तिमीमा मृत्युलाई निर्धारित गरिदिएका छौं ।[2] तथा हामी त्यसबाट हारेका छैनौं ।[3]

عَلَىٰٓ أَن نُّبَدِّلَ أَمْثَٰلَكُمْ وَنُنشِئَكُمْ فِى مَا لَا تَعْلَمُونَ ﴿٦١﴾

(६१) कि तिम्रो स्थानमा तिमीजस्तै अन्य पैदा गरिदियौं तथा तिमीलाई नयाँ रुपबाट (त्यस संसारमा) पैदा गरिदिऊ जसबाट तिमी (सर्वथा) अन्जान छौ ।[4]

وَلَقَدْ عَلِمْتُمُ ٱلنَّشْأَةَ ٱلْأُولَىٰ فَلَوْلَا تَذَكَّرُونَ ﴿٦٢﴾

(६२) तथा तिमीलाई निश्चित रुपमा प्रथम जन्मको ज्ञान पनि छ, अनि शिक्षा किन ग्रहण गर्दैनौ ?[5]

أَفَرَءَيْتُم مَّا تَحْرُثُونَ ﴿٦٣﴾

(६३) त्यस पश्चात अनि यो पनि भन कि तिमी जे-जति छर्छौ ।

ءَأَنتُمْ تَزْرَعُونَهُۥٓ أَمْ نَحْنُ ٱلزَّٰرِعُونَ ﴿٦٤﴾

(६४) त्यसलाई तिमीले नै उमार्दछौ अथवा हामी उमार्नेवाला हौं ?[6]

[1]अर्थात् तिम्रा पत्नीहरुसित सम्भोगका परिणामस्वरुप तिम्रा वीर्यका जो थोपा स्त्रीहरुका गर्भाशयमा जान्छ, त्यसबाट मानवीय रुपरेखा बनाउनेवाला हामी हौं वा तिमी ?

[2]अर्थात् प्रत्येक व्यक्तिको मृत्युको समय निश्चित गरिदिएका छौं जसबाट कोही अगाडी बढ्न सक्दैन जस्तै कोही बाल्यकालमा कोही युवावस्थामा तथा कोही बुढेसमा मर्दछ ।

[3]अथवा विवश होइन, बरु सामर्थ्यवान छौं ।

[4]अर्थात् तिम्रो रुप बदलेर तिमीलाई बाँदर अथवा सुंगुर बनाइदिऊ तथा तिम्रो ठाउँमा तिम्रो रुपरेखाको कुनै सृष्टि पैदा गरिदेऊन्

[5]अर्थात् किन बुझ्दैनौ कि उसले जुनप्रकार पहिलो पटक पैदा गऱ्यो (जसलाई तिमी जान्दछौ, त्यसले पुन: पनि पैदा गर्न सक्छ ।

[6]अर्थात् भूमिमा तिमी जुन बीउ छर्दछौ त्यो एउटा बिरुवा बनेर उम्रन्छ । एउटा निर्जीव दानालाई च्यातेर तथा धर्तीको छातिलाई चिरेर यसप्रकार वृक्ष उमार्ने को हो ? यो पनि वीर्यको थोपाबाट मानिस बनाइदिनु जस्तो हाम्रै सामर्थ्यको कलाकारी हो अथवा तिम्रो कुनै शिल्पकारी अथवा छुमन्तरको परिणाम हो ?

لَوْ نَشَاءُ لَجَعَلْنَاهُ حُطَامًا فَظَلْتُمْ تَفَكَّهُونَ ﴿٦٥﴾

(६५) यदि हामी चाहन्छौं भने उसलाई कण-कण गरिदिन्छौं अनि तिमी आश्चर्यका साथ कुरा बनाउँदै नै रहनेछौ ।[1]

إِنَّا لَمُغْرَمُونَ ﴿٦٦﴾

(६६) कि हामीमाथि त दण्ड नै परिहाल्यो ।[2]

بَلْ نَحْنُ مَحْرُومُونَ ﴿٦٧﴾

(६७) बरु हामी त पूर्णरुपमा बञ्चित नै रहयौं ।

أَفَرَأَيْتُمُ الْمَاءَ الَّذِي تَشْرَبُونَ ﴿٦٨﴾

(६८) त यो भन कि जुन पानीलाई तिमी पिउँछौ ।

أَأَنْتُمْ أَنْزَلْتُمُوهُ مِنَ الْمُزْنِ أَمْ نَحْنُ الْمُنْزِلُونَ ﴿٦٩﴾

(६९) त्यसलाई बादलहरुबाट पनि तिमीले नै उतारेका छौ अथवा हामी वर्षा गर्दछौं ।

لَوْ نَشَاءُ جَعَلْنَاهُ أُجَاجًا فَلَوْلَا تَشْكُرُونَ ﴿٧٠﴾

(७०) यदि हाम्रो इच्छा छ भने हामीले त्यसलाई विष गरिदिन्छौं । अनि तिमी हाम्रो कृतज्ञता किन व्यक्त गर्दैनौ ?[3]

[1]अर्थात् खेतीलाई हराभरा गर्नुका पश्चात जब त्यो पाक्नुका करीब हुनजान्छ त यदि हामी चाहन्छौं भने त्यसलाई सुकाएर साना-साना टुक्रा गरिदिन्छौं तथा तिमी आश्चर्यले मुख हेर्दै रहनेछौ । تفكُّه का दुईटा अर्थ छन्, सुख-आनन्द पनि एवं दुख एवं निराशा पनि । यहाँ दोस्रो अर्थ लिएको छ । यसका अनेक अर्थ गरिएका छन् । कुरा बनाउँदै रहनेछौ, शोक गर्नेछौ, लज्जित हुनेछौ, आश्चर्य गर्नेछौ, एक-अर्कालाई दोष दिनेछौ तथा दुखी हुनेछौ आदि । ظلتم (वास्तवमा) صرتم (भइहाल्नेछौ) का अर्थमा छ ।

[2]अर्थात् पहिला हामीले भूमिमा हलो चलाएर त्यसलाई बराबर गऱ्यौं, अनि बीउ छऱ्यौं, त्यसपछि त्यसलाई पानी दिंदैगऱ्यौं । किन्तु जब फसल पाक्नुको समय आयो त त्यो सुकिहाल्यो तथा हामीलाई केही पनि प्राप्त भएन । अर्थात यो सबै व्यय तथा श्रम एउटा दण्ड नै भयो जुन हामीले सहन गर्नुपऱ्यो । दण्डको अर्थ यही हुन्छ कि मनुष्यलाई त्यसका माल अथवा परिश्रमको लाभ नमिलोस्, बरु त्यो यस्तै व्यर्थ होस्, अथवा त्यसबाट बलपूर्वक केही लिइयोस् तथा त्यसका साटो त्यसलाई केही नदिइयोस् ।

[3]अर्थात् यस अनुग्रहमाथि हाम्रो आज्ञाको पालना गरी हाम्रो व्यवहारिक कृतज्ञता किन व्यक्त गर्दैनौ ?

أَفَرَءَيْتُمُ النَّارَ الَّتِي تُورُونَ ﴿٧١﴾

(७१) त यो पनि बताउ कि जुन आगो तिमी सल्काउँछौ ।

ءَأَنتُمْ أَنشَأْتُمْ شَجَرَتَهَا أَمْ نَحْنُ الْمُنشِئُونَ ﴿٧٢﴾

(७२) त्यसका वृक्षलाई तिमीले पैदा गरेका छौ अथवा हामी त्यसका पैदा गर्नेवाला हौं ?[1]

نَحْنُ جَعَلْنَاهَا تَذْكِرَةً وَمَتَاعًا لِّلْمُقْوِينَ ﴿٧٣﴾

(७३) हामीले त्यसलाई शिक्षा प्राप्त गर्नुको साधन[2] तथा यात्रीहरुको लाभका वस्तु बनाएका छौं ।[3]

فَسَبِّحْ بِاسْمِ رَبِّكَ الْعَظِيمِ ﴿٧٤﴾

(७४) तसर्थ आफ्ना महान प्रभुका नामको जप गर्नेगर ।

فَلَا أُقْسِمُ بِمَوَاقِعِ النُّجُومِ ﴿٧٥﴾

(७५) त म सौगन्ध खान्छु सिताराहरु खस्नुको ।[4]

[1]भन्दछन् कि अरबमा दुई वृक्ष छन्, मर्ख तथा अफ़ार । ती दुवैका डालाहरुलाई लिएर उनलाई आपसमा रगड्नुबाट आगोका फिलिङ्गाहरु निस्कन्छन् ।

[2]कि यसका प्रभाव एवं लाभ विचित्र छन् तथा संसारका असंख्य वस्तुहरुका तयारीका लागि त्यसलाई ढाडको अस्थिको स्थान प्राप्त छ, जो हाम्रा महासामर्थ्यको प्रतीक छ । हामीले संसारमा जस्तै यो आगो पैदा गरेका छौं आख़िरतमा पनि पैदा गर्नुमा समर्थ छौं, जो यसभन्दा ६९ गुना तपनमा अधिक हुनेछ । (जस्तो कि हदीसमा छ)

[3] مُقْوِين यो مُقْوِي (मुक्वी) को बहुवचन हो । قَوَآء (क्वाअ) शून्य वनमा प्रवेश गर्ने, अभिप्राय यात्री हो । अर्थात् यात्री मरुभूमि तथा जङ्गलहरुमा यी वृक्षहरुबाट लाभ उठाउँछन्, यिनीबाट गर्मी, प्रकाश तथा बाल्ने दाउरा प्राप्त गर्दछन् । केही ज्ञाताहरुले मुक्वीसित अभिप्राय त्यो दरिद्र लिएका छन् जो भूखका कारण खाली पेट भएका हुन्छन् । केही अरुले त्यसको अर्थ लाभ प्राप्त गर्नेवाला गरेका छन् । यसमा धनी, निर्धन र यात्री सबै आउँछन् तथा सबै आगोबाट लाभ प्राप्त गर्दछन् । यसैकारण हदीसमा जुन तीन कुराहरुलाई सार्वजनिक राख्नुको आदेश दिएको छ, उनीहरुमा पानी तथा घाँसका अतिरिक्त आगो पनि छ । (अबू दाऊद, किताबुल बयूअ, व इब्ने माजा, किताबुर रुहून, बाबु अल मुस्लिमून शुरकाअ फी सलासिन)

[4] فَلا أُقسِم मा 'ला' अधिक छ जो जोड दिनका लागि छ, अथवा यो अधिक छैन बरु पूर्वको कुनै कुरोलाई नकार्नका लागि छ । अर्थात् यो कुरआन ज्योतिष अथवा कविता होइन बरु म ताराहरु खस्नुका शपथ लिएर भन्दछु कि यो कुरआन सम्मानवाला छ । مواقع النجوم सित अभिप्राय ताराहरुका उदय तथा अस्त हुनुका स्थान एवं ध्रुव हो । केही अन्यले अनुवाद गरेका छन्,

وَاِنَّهٗ لَقَسَمٌ لَّوْ تَعْلَمُوْنَ عَظِيْمٌ ۙ
(७६) तथा यदि तिमीलाई ज्ञान छ भने यो बहुत ठूलो सौगन्ध हो ।

اِنَّهٗ لَقُرْاٰنٌ كَرِيْمٌ ۙ
(७७) के निःसन्देह यो कुरआन अत्यन्त सम्मान भएको छ ।[१]

فِيْ كِتٰبٍ مَّكْنُوْنٍ ۙ
(७८) जो एक सुरक्षित पुस्तकमा (लिखित) छ ।[२]

لَّا يَمَسُّهٗٓ اِلَّا الْمُطَهَّرُوْنَ ۗ
(७९) जसलाई केवल पवित्र मानिसहरु नै स्पर्श गर्न सक्छन् ।[३]

تَنْزِيْلٌ مِّنْ رَّبِّ الْعٰلَمِيْنَ
(८०) यो अखिल जगत्‌का प्रभुको तर्फबाट अवतरित गरिएको छ ।

اَفَبِهٰذَا الْحَدِيْثِ اَنْتُمْ مُّدْهِنُوْنَ ۙ
(८१) त के तिमी यस्ता कुरालाई साधारण (एवं तुच्छ) ठानिराखेका छौ ?[४]

शपथ ग्रहण गर्दछु आयतहरुका उतर्नुको पैग़म्बरका हृदयहरुमा (मुजिहुल कुरआन) अर्थात् नुजुम (ताराहरु) कुरआनका आयतहरु तथा मबाकिया (उतर्नुको स्थान) अम्बियाका हृदय हुन् । केही अरु ज्ञाताहरुले यसको अर्थ कुरआन समय-समयमा उतर्नु अभिप्राय लिएका छन् तथा केहीले क़्यामतका दिन ताराहरु खस्नुको तात्पर्य लिएका छन् । (इब्ने कसीर)

[१]यो शपथको उत्तर हो ।

[२]अर्थात् लौहे महफूज (सुरक्षित पट्टिका) मा ।

[३] لا يَمَسُّهُ मा सर्वनाम लौहे महफूजतिर फर्कन्छ । पवित्रजनहरुसित तात्पर्य फरिश्ताहरु हुन् । केही अन्यले त्यसलाई कुरआनतिर फर्काएका छन् अर्थात् त्यसलाई फरिश्ता नै छुन्छन्, अर्थात् आकाशमा फरिश्ताहरुका बाहेक कसैको पनि पहुँच कुरआनसम्म हुँदैन । अभिप्राय मुश्रिकीनको खण्डन हो जसले भन्थे कि कुरआन शैतानी प्रभावबाट सर्वथा सुरक्षित छ ।

[४] حديث (हदीस) सित अभिप्राय कुरआन हो । مُداهَنَة (मुदाहनत) त्यो आलस्य जुन कुफ्र तथा शिर्कका मुकाबिलामा अप्नाइन्छ, जबकि उनका मुकाबिलामा कडा नीतिको आवश्यकता छ अर्थात् यस कुरआनलाई अपनाउनका मामिलामा सबै काफिरहरुलाई प्रसन्न गर्नका लागि नम्रता तथा विमुखताको मार्ग अप्नाइराखेका छौ, जबकि यो कुरआन जो उपयुक्त गुणहरुले युक्त छ, यस योग्य छ कि त्यसलाई अधिक खुशीले अपनाइयोस् ।

وَتَجْعَلُونَ رِزْقَكُمْ أَنَّكُمْ تُكَذِّبُونَ ﴿٨٢﴾

(८२) तथा आफ्ना भागहरुमा यही लिन्छौ कि झुठ्लाउँदै हिंड ।

فَلَوْلَا إِذَا بَلَغَتِ الْحُلْقُومَ ﴿٨٣﴾

(८३) त जबकि (प्राण) घाँटीसम्म पुग्दछ ।

وَأَنتُمْ حِينَئِذٍ تَنظُرُونَ ﴿٨٤﴾

(८४) तथा तिमी त्यस समय (आँखाले) हेरिराख ।[1]

وَنَحْنُ أَقْرَبُ إِلَيْهِ مِنكُمْ وَلَٰكِن لَّا تُبْصِرُونَ ﴿٨٥﴾

(८५) तथा हामी त्यस व्यक्तिसित तिम्रा अपेक्षा अत्याधिक निकट हुन्छौं,[2] परन्तु तिमी देख्न सक्दैनौ ।[3]

فَلَوْلَا إِن كُنتُمْ غَيْرَ مَدِينِينَ ﴿٨٦﴾

(८६) त यदि तिमी कसैको आज्ञाका अधीन छैनौ ।

تَرْجِعُونَهَا إِن كُنتُمْ صَادِقِينَ ﴿٨٧﴾

(८७) तथा त्यस कथनमा सत्य छौ त अलि त्यो प्राणलाई त फर्काउ ।[4]

---

[1]अर्थात् प्राण निस्किराखेको देख्छौ किन्तु त्यसलाई हटाउन सक्ने अथवा त्यसबाट कुनै लाभ पुऱ्याउनुको सामर्थ्य राख्दैनौ ।

[2]अर्थात् मर्नेवालाबाट हामी तिमीभन्दा पनि अधिक समीप हुन्छौं आफ्ना ज्ञान, सामर्थ्य तथा दर्शनका आधारमा, अथवा हामीबाट अभिप्राय अल्लाहका कार्यकर्ता अर्थात् मृत्युका फरिश्ताहरु हुन् जसले त्यसको प्राण निकाल्छन् ।

[3]अर्थात् आफ्नो अज्ञानताका कारण तिमीलाई यस कुराको ज्ञान छैन कि अल्लाह त तिम्रो प्राण रगबाट पनि अधिक समीप छ अथवा यमदूतहरुलाई तिमी देख्न सक्दैनौ ।

[4]دَانَ يَدِينُ को अर्थ हो अधीन हुनु, दोस्रो अर्थ हो प्रतिफल दिनु । अर्थात् यदि तिमी यस कुरामा साँचो छौ कि तिम्रो कोही मालिक तथा स्वामी छैन जसका तिमी अधीन छौ अथवा प्रतिकारको कुनै दिन आउने छैन, त त्यस निकालिएको प्राणलाई आफ्नो ठाउँ फिर्ता गरेर देखाइदेउ । यदि तिमी यस्तो गर्न सक्दैनौ भने स्पष्ट छ कि तिम्रो भ्रम बेकार छ । निश्चय तिम्रो एउटा स्वामी छ तथा निःसन्देह एउटा दिन आउनेछ जसमा त्यो मालिकले प्रत्येकलाई त्यसको कर्मफल दिनेछ ।

| | |
|---|---|
| (८८) त जो कोही पनि (अल्लाहका दरबार मा) निकट्तम् हुनेछ ।[1] | فَأَمَّآ إِن كَانَ مِنَ ٱلْمُقَرَّبِينَ ﴿٨٨﴾ |
| (८९) त्यसलाई त सुख छ एवं भोजन छ तथा सुखदायी स्वर्ग छ । | فَرَوْحٌ وَرَيْحَانٌ وَجَنَّتُ نَعِيمٍ ﴿٨٩﴾ |
| (९०) तथा जो व्यक्ति दाहिने हातवालाहरुमध्ये छ ।[2] | وَأَمَّآ إِن كَانَ مِنْ أَصْحَٰبِ ٱلْيَمِينِ ﴿٩٠﴾ |
| (९१) तैपनि शान्ति छ तिम्रा लागि कि तिमी दाहिनावालाहरुमध्ये छौ । | فَسَلَٰمٌ لَّكَ مِنْ أَصْحَٰبِ ٱلْيَمِينِ ﴿٩١﴾ |
| (९२) परन्तु यदि कोही झुठ्लाउनेवाला पथभ्रष्टहरुमध्ये छ ।[3] | وَأَمَّآ إِن كَانَ مِنَ ٱلْمُكَذِّبِينَ ٱلضَّآلِّينَ ﴿٩٢﴾ |
| (९३) त उम्लिराखेको पानीबाट सत्कार छ । | فَنُزُلٌ مِّنْ حَمِيمٍ ﴿٩٣﴾ |
| (९४) तथा नरक्मा जानुछ । | وَتَصْلِيَةُ جَحِيمٍ ﴿٩٤﴾ |
| (९५) यो (सूचना) सर्वथा सत्य तथा पूर्णतया निश्चित छ । | إِنَّ هَٰذَا لَهُوَ حَقُّ ٱلْيَقِينِ ﴿٩٥﴾ |
| (९६) त तिमी आफ्ना (अत्यन्त महिमावान) प्रभुका नामको पवित्रता वर्णन गर ।[4] | فَسَبِّحْ بِٱسْمِ رَبِّكَ ٱلْعَظِيمِ ﴿٩٦﴾ |

[1]सूर:का आरम्भमा कर्महरुका अनुसार मानिसहरुका जो तीन भेद वर्णन गरिएका थिए, उनको पुन: वर्णन गरिँदैछ । यो उनको प्रथम प्रकार हो जसलाई निकटका अतिरिक्त साबिकीन (अग्रणि) पनि भनिन्छ, किनकि उनी पुण्यका प्रत्येक कार्यमा लागेका हुन्छन् । ईमान स्वीकार गर्नुमा पनि अरुहरुभन्दा अगाडी हुन्छन् तथा आफ्ना यिनै गुणहरुका कारण उनी अल्लाहका सदनका समीपवर्तीहरुमा हुन्छन् ।

[2]यो दोस्रो श्रेणी हो, साधारण ईमान भएकाहरु । यिनी पनि नरक्बाट बचेर स्वर्गमा जानेछन् । परन्तु पदहरुमा साबिक़ीन (अग्रणी मानिसहरु) भन्दा कम हुनेछन् । मृत्युका समय उनलाई पनि फरिश्ताहरुले शान्तिको शुभ-सूचना दिन्छन् ।

[3]यो तेस्रो श्रेणी हो जसलाई सूर:का आरम्भमा أَصْحَابُ الْمَشْئَمَةِ "असहाबुल मशअम:" भनिएको थियो, बायाँ हातवाला अथवा अशुभवाला । यो आफ्ना कुफ्र तथा पाखण्डको दण्ड अथवा त्यसको अशुभ, नरक्को यातनाको रुपमा भोग्नेछन् ।

[4]हदीसहरुमा वर्णित छ कि दुई शब्द अल्लाहलाई अति प्रिय छन्, बोल्नुमा हल्का तथा तौलमा भारी छ ।

## सूरतुल हदीद-५७

سُوْرَةُ الْحَدِيْدِ

सूर: हदीह मदीनामा अवतरित भएको तथा यसमा उनान्तीस आयतहरु तथा चार रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु एवं अत्यन्त दयालु छ ।

سَبَّحَ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَالْاَرْضِ ۚ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ①

(१) आकाशहरु तथा धर्तीमा जे-जति छन् (सबै) अल्लाहको तस्बीह (महिमागान) गरिराखेका छन्,[१] र त्यो शक्तिशाली हिक्मतवाला छ ।

لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ يُحْيٖ وَيُمِيْتُ ۚ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ②

(२) आकाशहरु तथा धर्तीको राज्य उसैको हो,[२] त्यसैले जीवन दिन्छ तथा मृत्यु पनि तथा त्यो सबै वस्तुमाथि सामर्थ्यवान छ ।

هُوَ الْاَوَّلُ وَالْاٰخِرُ وَالظَّاهِرُ وَالْبَاطِنُ ۚ وَهُوَ بِكُلِّ شَيْءٍ

(३) त्यही आदि हो तथा त्यही अन्त, त्यही प्रत्यक्ष हो तथा त्यही अप्रत्यक्ष,[३] तथा त्यो प्रत्येक वस्तु

---

سبحان الله وبحمده سبحان الله العظيم (सुभहानल्लाह व बेहम्देही सुबहानल्लाह अल-अज़ीम) (सहीह बुखारी, अन्तिम हदीस तथा सहीह मुस्लिम किताबुज़ ज़िक्र, बाबु फ़जलित तहलील वत्तस्बीह वद्दुआ)

[१]यी महिमागान आफ्नो अवस्थाले होइन बरु आफ्ना कथनले गर्दछन् । यसकारण अल्लाहले भन्नुभयो ﴿وَلٰكِنْ لَّا تَفْقَهُوْنَ تَسْبِيْحَهُمْ﴾

"किन्तु तिमी उनको तस्वीह (महिमागान) लाई बुझ्न सक्दैनौ ।" (बनी इस्राईल-४४)

ईशदूत दाऊद अलैहिस्सलामका बारेमा वर्णन छ कि उनका साथ पर्वतहरुले पनि (महिमागान) गर्दथे । (अल-अम्बिया-७९) यदि यो तस्वीह अवस्था अथवा संकेतको तस्वीह भएको भए त ईशदूत दाऊदका साथ त्यसलाई विशेष गर्नुको आवश्यकता हुँदैनथ्यो ।

[२]यसकारण त्यो उनमा जस्तो चाहन्छ अधिकार गर्दछ, त्यसका अतिरिक्त कसैको आदेश तथा अधिकार चल्दैन । अथवा अभिप्राय हो कि वर्षा, वनस्पति तथा जीविका सबै कोष उसैका स्वामित्वमा छन् ।

[३]त्यही आदि हो अर्थात् त्यसभन्दा पहिला केही थिएन, त्यही अन्त हो, जसका पश्चात कुनै कुरो छैन,

عَلِيمٌ ۝٣

लाई राम्ररी जान्दछ ।

هُوَ الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ فِي سِتَّةِ أَيَّامٍ ثُمَّ اسْتَوَىٰ عَلَى الْعَرْشِ ۚ يَعْلَمُ مَا يَلِجُ فِي الْأَرْضِ وَمَا يَخْرُجُ مِنْهَا

(४) त्यही हो जसले आकाशहरु तथा धर्तीलाई ६ दिनमा पैदा गऱ्यो, अनि अर्शमाथि उच्च भयो,[1] त्यो (राम्ररी) जान्दछ त्यस वस्तुलाई जो धर्तीमा जान्छ[2] तथा जो त्यसबाट निस्कन्छ[3]

त्यही व्याप्त छ अर्थात् सबैमाथि प्रभुत्वशाली छ, त्यसमाथि कसैले प्रभुत्व राख्दैन । त्यही अन्तर्यामी छ, अर्थात् अन्त:करणका सबै कुरा केवल त्यही जान्दछ अथवा मानिसहरुको आँखा तथा बुद्धिहरुबाट लुप्त छ । (फ़तहुल क़दीर) नबी सल्लल्लाहु अलैहि व सल्लमले आफ्ना पुत्री फ़ातिमा रज़ी अल्लाहु अन्हालाई यो दुआ पढ्नमा जोड दिनुभएको थियो ।

«اللَّهُمَّ! رَبَّ السَّمٰوَاتِ السَّبْعِ وَرَبَّ الْعَرْشِ الْعَظِيمِ، رَبَّنَا وَرَبَّ كُلِّ شَيْءٍ، فَالِقَ الْحَبِّ وَالنَّوَىٰ، وَمُنْزِلَ التَّوْرَاةِ وَالْإِنْجِيلِ وَالْفُرْقَانِ، أَعُوذُ بِكَ مِنْ شَرِّ كُلِّ شَيْءٍ أَنْتَ آخِذٌ بِنَاصِيَتِهِ، اللَّهُمَّ! أَنْتَ الْأَوَّلُ فَلَيْسَ قَبْلَكَ شَيْءٌ، وَأَنْتَ الْآخِرُ فَلَيْسَ بَعْدَكَ شَيْءٌ، وَأَنْتَ الظَّاهِرُ فَلَيْسَ فَوْقَكَ شَيْءٌ، وَأَنْتَ الْبَاطِنُ فَلَيْسَ دُونَكَ شَيْءٌ، اقْضِ عَنَّا الدَّيْنَ وَأَغْنِنَا مِنَ الْفَقْرِ»

(सहीह मुस्लिम किताबुज़् ज़िक्रे वद्दुआये) यस दुआमा जुन ऋण तिर्नका लागि मस्नून छ, प्रथम एवं अन्त तथा व्याप्त (गोचर) एवं गुप्त (अगोचर) को अर्थ वर्णन गरिएको छ ।

[1]यसै अर्थका आयतहरु सूर: आराफ़-५४, सूर: यूनुस-३, सूर: अलिफ़.लाम.मीम. सजदा-४ आदि आयतहरुमा गुज्रिसकेको छ । उनका भाष्य हेर्नुस् ।

[2]अर्थात धर्तीमा वर्षाको जुन थोपा तथा अन्य एवं फलहरुका जो बीउ प्रवेश गर्दछन्, त्यसको अवस्था तथा मात्रालाई त्यो जान्दछ ।

[3]जुन बोट चाहे तिनी फलहरुका होउन्, अथवा अनाजहरुका, अथवा शोभा एवं सुगन्धवाला फुलहरुका, यो जति पनि जस्तो पनि विकसित हुन्छन्, सबै अल्लाहका ज्ञानमा छ । जस्तै अर्को स्थानमा भन्नुभयो :

﴿وَعِندَهُۥ مَفَاتِحُ ٱلْغَيْبِ لَا يَعْلَمُهَآ إِلَّا هُوَ ۚ وَيَعْلَمُ مَا فِى ٱلْبَرِّ وَٱلْبَحْرِ ۚ وَمَا تَسْقُطُ مِن وَرَقَةٍ إِلَّا يَعْلَمُهَا وَلَا حَبَّةٍ فِى ظُلُمَٰتِ ٱلْأَرْضِ وَلَا رَطْبٍ وَلَا يَابِسٍ إِلَّا فِى كِتَٰبٍ مُّبِينٍ﴾

"तथा अल्लाहकै पासमा छन् परोक्षका साँचोहरु (कोषागार), उनलाई अल्लाहका अतिरिक्त कोही जान्दैन, तथा त्यो वस्तुहरुलाई जान्दछ जे-जति थलामा छ तथा जे-जति समुद्रहरुमा छ तथा कुनै पात खस्दैन परन्तु त्यो त्यसलाई पनि जान्दछ तथा कुनै गेडा धर्तीका अँध्यारा भागहरुमा पर्दैन तथा न कुनै भिजेको एवं सुकेको वस्तु खस्छ किन्तु यी सबै स्पष्ट पुस्तकमा छन् । (अल-अन्आम-५९)

وَمَا يَنْزِلُ مِنَ السَّمَاءِ وَمَا يَعْرُجُ فِيهَا ۖ وَهُوَ مَعَكُمْ أَيْنَ مَا كُنْتُمْ ۚ وَاللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ④

तथा जो आकाशबाट तल आउँछ[1] तथा जे-जति चढेर त्यसमा जाऊन्[2] तथा जहाँ कहीं तिमी छौ त्यो तिम्रो साथमा छ[3] तथा जे-जति तिमी गरिराखेका छौ, अल्लाह देखिराखेको छ ।

لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَإِلَى اللَّهِ تُرْجَعُ الْأُمُورُ ⑤

(५) आकाशहरु तथा धर्तीको राज्य उसैको हो, तथा समस्त कार्य उसैतिर फर्काइन्छन् ।

يُولِجُ اللَّيْلَ فِي النَّهَارِ وَيُولِجُ النَّهَارَ فِي اللَّيْلِ ۚ وَهُوَ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ⑥

(६) त्यही रात्रिलाई दिनमा प्रवेश गराउँछ तथा त्यही दिनलाई रात्रिमा प्रवेश गराउँछ,[4] तथा छातिमा लुकेका कुराहरुको त्यसले पूर्ण ज्ञान राख्दछ ।

آمِنُوا بِاللَّهِ وَرَسُولِهِ وَأَنْفِقُوا مِمَّا جَعَلَكُمْ مُسْتَخْلَفِينَ فِيهِ ۖ

(७) अल्लाहमाथि तथा त्यसका रसूल (सन्देष्टा) माथि ईमान स्वीकार गरिहाल तथा त्यस धनमध्येबाट खर्च गर जसमा अल्लाहले तिमीलाई (अरुहरुको)

---

[1]वर्षा, तुषारो, हिउँ, भाग्य तथा त्यो आदेश जो फरिश्ताहरु लिएर उत्रन्छ ।

[2]फरिश्ताहरु मानिसहरुका जो कर्म लिएर उक्लिन्छन्, जस्तो हदीसमा वर्णन छ कि अल्लाहतिर रातका कर्मदिनभन्दा पहिला तथा दिनका कर्मरातभन्दा पहिला उक्लिन्छन् । (सहीह मुस्लिम, किताबुल ईमान, बाबुन इन्नल्लाह ला यनामु)

[3]अर्थात् तिमी जलमा छौ अथवा थलमा, रात होस् अथवा दिन । घरहरुमा होस् अथवा वनहरुमा, प्रत्येक स्थानमा प्रत्येक समय त्यो आफ्ना ज्ञान तथा दर्शन शक्तिका आधारमा तिम्रो साथमा छ अर्थात तिम्रा एउटा-एउटा कर्मलाई देख्दछ, तिम्रो एउटा-एउटा कुरा जान्दछ तथा सुन्दछ । यही विषय सुरः हूद-३, सूरः रअ्द-१० तथा अन्य आयतहरुमा पनि वर्णन गरिएको छ ।

[4]अर्थात् सबै कुराको स्वामी त्यही हो । त्यसले जस्तो चाहन्छ उनमा अधिकार गर्दछ, त्यसको आज्ञा एवं आदेशले कहिले रात लामो, दिन छोटो तथा कहिले यसका विपरीत दिन ठुलो तथा रात सानो हुन्छ तथा कहिले दुबै बराबर । यसैप्रकार कहिले गर्मी तथा कहिले जाडो, कहिले बसन्त तथा पतझड । ऋतुको परिवर्तन पनि उसैको इच्छा तथा आदेशबाट हुन्छ ।

فَالَّذِينَ آمَنُوا مِنكُمْ وَأَنفَقُوا لَهُمْ أَجْرٌ كَبِيرٌ ⑦

उत्तराधिकारी बनाएको छ ।[1] त तिनीमध्ये जो ईमान स्वीकार गर्दछन् तथा दान गर्छन् उनीहरुलाई निकै ठुलो पुण्य प्राप्त हुनेछ ।

وَمَا لَكُمْ لَا تُؤْمِنُونَ بِاللَّهِ ۙ وَالرَّسُولُ يَدْعُوكُمْ لِتُؤْمِنُوا بِرَبِّكُمْ وَقَدْ أَخَذَ مِيثَاقَكُمْ إِن كُنتُم مُّؤْمِنِينَ ⑧

(८) तिमी अल्लाहमाथि ईमान स्वीकार किन गर्दैनौ ? जबकि स्वयं रसूल तिमीलाई आफ्ना प्रभुमाथि ईमान स्वीकारका लागि आमन्त्रण दिराखेको छ तथा यदि तिमी ईमानवाला हौ भने त्यसले तिमीबाट दृढ वचन पनि लिइसकेको छ ।[2]

هُوَ الَّذِي يُنَزِّلُ عَلَىٰ عَبْدِهِ آيَاتٍ بَيِّنَاتٍ لِّيُخْرِجَكُم مِّنَ الظُّلُمَاتِ إِلَى النُّورِ ۚ وَإِنَّ اللَّهَ بِكُمْ لَرَءُوفٌ رَّحِيمٌ ⑨

(९) त्यो (अल्लाह) नै हो जो आफ्ना भक्तमाथि स्पष्ट आयतहरु अवतरित गर्दछ ताकि त्यसले तिमीलाई अन्धकारबाट प्रकाशतिर लगोस् । निःसन्देह अल्लाह (तआला) तिमीमाथि विनम्र दया गर्नेवाला छ ।

[1]अर्थात् यो माल यसभन्दा पहिला कुनै अर्कोको पासमा थियो । यसमा यस कुरोको संकेत छ कि तिम्रो पासमा पनि यो धन रहने छैन, अरुहरु त्यसका उत्तराधिकारी बन्नेछन् । यदि तिमीले त्यसलाई अल्लाहका मार्गमा खर्च गरेनौ भने पछि यसका उत्तराधिकारी त्यसलाई अल्लाहका मार्गमा व्यय गरेर तिमीभन्दा अधिक सौभाग्य प्राप्त गर्न सक्दछन् तथा यदि उनीहरु अवज्ञामा खर्च गर्दछन् भने तिमी पनि सहायता गर्नुका अपराधमा समातिने छौ । (इब्ने कसीर) हदीसमा चर्चित छ कि मनुष्य भन्दछ कि मेरो धन, मेरो माल, हाँलाकि तिम्रो एक माल त त्यो हो जो तिमीले खाई-पिई समाप्त गरिदियौ । दोस्रो त्यो हो जसलाई लगाएर पुरानो गरिदियौ तथा तेस्रो त्यो हो जो अल्लाहको मार्गमा खर्च गरेर आख़िरतका लागि सुरक्षित गरिहाल्यौ । यसका अतिरिक्त जे-जति छ, त्यो सब अरुहरुका भागहरुमा आउनेछ । (सहीह मुस्लिम, किताबुज़्जुहद, मुसनद अहमद ४/२४)

[2]इब्ने क़सीरले أخذ को कर्ता الرسول लाई बनाउनु भएको छ तथा अभिप्राय त्यो बैअत (वचन) लिएको छ जो रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम सहाबा किरामबाट लिन्थे कि सुख एवं दुख प्रत्येक दशामा सुन्नु तथा अनुपालन गर्नु हो । इमाम इब्ने जरीरका निकट यसको कर्ता अल्लाह हो तथा अभिप्राय त्यो प्रतिज्ञा हो जो अल्लाह तआलाले सबै मनुष्यहरुबाट त्यस समय लिएको थियो जब उनलाई आदम अलैहिस्सलामको पिठ्यूँबाट निकालेको थियो, जो 'अहदे अलस्तु' कहलाउँछ, जसको वर्णन सूरः आराफ़-१७२ मा छ ।

وَمَا لَكُمْ أَلَّا تُنْفِقُوا فِي سَبِيلِ اللَّهِ وَلِلَّهِ مِيرَاثُ السَّمَاوَاتِ وَالْأَرْضِ ۚ لَا يَسْتَوِي مِنْكُمْ مَنْ أَنْفَقَ مِنْ قَبْلِ الْفَتْحِ وَقَاتَلَ ۚ أُولَٰئِكَ أَعْظَمُ دَرَجَةً مِنَ الَّذِينَ أَنْفَقُوا مِنْ بَعْدُ وَقَاتَلُوا ۚ وَكُلًّا وَعَدَ اللَّهُ الْحُسْنَىٰ ۚ وَاللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ⑩

(१०) तथा तिमीलाई के भएको छ कि तिमी अल्लाहका मार्गमा खर्च गर्दैनौ ? वास्तवमा आकाशहरु तथा धर्तीका (समस्त) उत्तराधिकार (वस्तुहरु) को स्वामी (एक्लो) अल्लाह नै छ । तिमीमध्येबाट जुन मानिसहरुले विजयभन्दा पूर्व अल्लाहका मार्गमा दिएका छन् तथा धर्मयुद्ध गरेका छन् । उनीहरु (अरुहरुका) समतुल्य छैनन्,[1] बरु उनीभन्दा अत्यन्त उच्च पदका छन् जसले विजयका पश्चात दान गरे तथा धर्मयुद्ध गरे ।[2] हो भलाईको वचन त अल्लाह तआलाको ती सबैसित छ,[3] र जे-जति तिमी मानिसहरु गरिराखेका

[1]फ़तह (विजय) सित अभिप्राय अधिकांश व्याख्याहरुका निकट मक्काको विजय हो । केही ज्ञाताहरुले हुदैबियाको सन्धिलाई खुला विजय (फ़त्हे मोबीन) मानेर त्यसैलाई तात्पर्य लिएका छन् । जे पनि होस्, हुदैबीया सन्धि अथवा मक्काको विजयभन्दा पहिला मुसलमान संख्या तथा शक्तिमा कम थिए तथा मुसलमानहरुको आर्थिक दशा पनि निकै कमजोर थियो । यी स्थितिहरुमा अल्लाहका मार्गमा खर्च गर्नु तथा ज़िहादमा भाग लिनु अत्यन्त कठिन तथा बडो साहसको काम थियो, जबकि मक्का विजयका पश्चात यो दशा परिवर्तन भयो । मुसलमान शक्ति तथा संख्यामा पनि बढ्दै गए तथा उनको आर्थिक दशा पनि पहिलाभन्दा कैयन् राम्रो भयो । यसमा अल्लाह तआ़लाले दुबै युगहरुका मुसलमानहरुका सन्दर्भमा भन्नुभयो कि यिनी पुण्यमा समान हुन सक्दैनन् ।

[2]किनकि पहिला गुज्रेकाको व्यय गर्नु तथा ज़िहाद दुबै काम अति कठिन स्थितिमा भए । यसबाट विदित भयो कि सत्कर्मी तथा साहसीहरुलाई अन्य मानिसहरुमाथि प्रधानता दिनुपर्दछ । यसकारण अहले सुन्नतका निकट प्रतिष्ठा एवं प्रधानतामा अबू बक्र सिद्दीक रज़ीयल्लाहु अन्हु सर्वोत्तम हुनुहुन्छ, किनकि प्रथम ईमानवाला पनि उहाँ नै हुनुहुन्छ तथा पहिला खर्च गर्नेवाला एवं प्रथम मोज़ाहिद (धर्मयोद्धा) पनि उहाँ नै हुनुहुन्छ । यसैकारण रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले आदरणीय सिद्दीक अक्बर रज़ीयल्लाहु अन्हुलाई आफ्ना जीवन तथा उपस्थितिमा नमाज़का लागि अगाडी गर्नुभो तथा यसैकारण मुसलमानहरु (सहाबाले) उनलाई ख़िलाफतका अधिकारमा प्राथमिकता दिए । (رضي الله عنهم و رضوا عنه)

[3]यसमा स्पष्ट गरिदियो कि आदरणीय सहाबा रज़ीयल्लाहु अन्हुका मध्य प्रतिष्ठा एवं प्रधानतामा अन्तर अवश्य छ, किन्तु श्रेणीहरुमा अन्तरको अर्थ यो होइन कि पछिका मुसलमान हुने सहाबा रज़ीयल्लाहु अन्हु ईमान तथा नैतिकतामा गए गुज्रेका छन्,

छौ त्यसबाट अल्लाह अवगत छ ।

مَنْ ذَا الَّذِي يُقْرِضُ اللَّهَ قَرْضًا حَسَنًا فَيُضٰعِفَهُ لَهُ وَلَهُ أَجْرٌ كَرِيمٌ ﴿١١﴾

(११) को छ ? जसले अल्लाह (तआ़ला) लाई राम्रो प्रकारले ऋण दिन्छ, अनि अल्लाह (तआ़ला) त्यसका लागि त्यो बढाउँदै जान्छ तथा त्यसको प्रिय प्रतिफल सिद्ध हुनजान्छ ।[1]

يَوْمَ تَرَى الْمُؤْمِنِينَ وَالْمُؤْمِنٰتِ يَسْعٰى نُورُهُمْ بَيْنَ أَيْدِيهِمْ وَبِأَيْمٰنِهِمْ بُشْرٰىكُمُ الْيَوْمَ جَنّٰتٌ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهٰرُ خٰلِدِينَ فِيهَا ذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيمُ ﴿١٢﴾

(१२) [केयामत (प्रलय) का] दिन तिमीले देख्नेछौ कि ईमान भएका पुरुष एवं महिलाहरुको प्रकाश उनका अगाडी-अगाडी तथा उनका दायाँ दौडिराखेको हुनेछ । आज तिमीहरुलाई ती स्वर्गहरुको शुभ-सूचना छ जसका तल (शीतल जल) का सरिताहरु प्रवाहित छन्, जसमा सधैंको निवास छ । यो हो महान सफलता ।[2]

जस्तो कि केही मानिस आदरणीय मुआवीया रज़ीयल्लाहु अन्हु तथा उनका पिता एवं अन्य यस्तै प्रतिष्ठावान सहाबाका सम्बन्धमा अपशब्द अथवा उनलाई 'तुलका' भनेर उनको अवहेलना तथा अपमान गर्दछन् । नबी सल्लल्लाहु अलैहि व सल्लमले सबै सहाबाका सम्बन्धमा भन्नुभयो : لا تسبوا أصحابي "मेरा सहाबालाई गाली नगर । सौगन्ध छ त्यस अस्तित्वको जसका हातमा मेरो प्राण छ, यदि तिमीहरुमध्ये कोही ओहुद पर्वत जति सुन पनि अल्लाहको मार्गमा खर्च गर्दछ त त्यो मेरा सहाबाको एक मुद्द (वज़न) का बराबर पनि छैन ।" (सहीह बुख़ारी तथा मुस्लिम किताबु फ़जाएलिस् सहाबा)

[1]अल्लाहलाई राम्रो ऋण दिनुको अभिप्राय यो हो कि अल्लाहका मार्गमा दान तथा पुण्य गर्नु । यो धन जो मानिस अल्लाहका मार्गमा व्यय गर्दछ, अल्लाहले दिएको हुन्छ । तैपनि त्यसलाई ऋण भन्नु, यो अल्लाहको अनुग्रह तथा दया हो कि त्यसले यस खर्चमाथि त्यस्तै पुण्य प्रदान गर्नेछ जस्तो ऋणको भुक्तानी अनिवार्य हुन्छ ।

[2]यो प्रलयमा पुल सिरातमा हुनेछ, यो प्रकाश उनका ईमान तथा पुण्यका कर्महरुको प्रतिफल हुनेछ, जसका प्रकाशमा यो स्वर्गको मार्ग सरलताले मार्ग पूरा गर्नेछन् । इमाम इब्ने कसीर तथा इमाम इब्ने जरीर आदिले وبأيمانهم को यो अर्थ लिएका छन् कि उनका दायाँ हातहरुमा उनका कर्मपत्र हुनेछन् ।

[3]यो ती फरिश्ताहरुले भन्नेछन् जो उनका स्वागत तथा अगुवाईका लागि त्यहाँ हुनेछन् ।

يَوْمَ يَقُولُ الْمُنٰفِقُوْنَ وَالْمُنٰفِقٰتُ لِلَّذِيْنَ اٰمَنُوا انْظُرُوْنَا نَقْتَبِسْ مِنْ نُّوْرِكُمْ ۚ قِيْلَ ارْجِعُوْا وَرَآءَكُمْ فَالْتَمِسُوْا نُوْرًا ؕ فَضُرِبَ بَيْنَهُمْ بِسُوْرٍ لَّهٗ بَابٌ ؕ بَاطِنُهٗ فِيْهِ الرَّحْمَةُ وَظَاهِرُهٗ مِنْ قِبَلِهِ الْعَذَابُ ۞

(१३) त्यस दिन द्वयवादी (मुनाफ़िक) पुरुष एवं महिलाहरु ईमान भएकाहरुसित भन्नेछन् कि हाम्रो प्रतीक्षा त गर ताकि हामीले पनि तिम्रो दिव्य ज्योतिबाट केही प्रकाश प्राप्त गरौं[1] उत्तर दिइनेछ कि तिमी आफ्ना पछाडी फर्क[2] तथा प्रकाशको खोजी गर । अनि उनका तथा तिनीहरुकामध्ये[3] एउटा पर्खाल स्थापित गरिदिइने छ, जसमा द्वार पनि हुनेछ । त्यसका भित्री भागमा कृपा हुनेछ तथा वाह्य[4] भागमा यातना हुनेछ ।[5]

يُنَادُوْنَهُمْ اَلَمْ نَكُنْ مَّعَكُمْ ؕ قَالُوْا بَلٰى وَلٰكِنَّكُمْ فَتَنْتُمْ اَنْفُسَكُمْ وَتَرَبَّصْتُمْ وَارْتَبْتُمْ وَغَرَّتْكُمُ

(१४) यिनी चिच्याइ-चिच्याइ तिनीहरुसित भन्नेछन् कि के हामी तिम्रा साथमा थिएनौं ?[6] उनीहरुले भन्नेछन् कि हो, थियौ त, परन्तु तिमीले स्वयं आफूलाई विचलनमा पारेर राखेका थियौ,[7] तथा प्रतीक्षामा नै

[1]यी अवसरवादी केही दूरसम्म ईमान भएकाहरुका साथमा उनका साथमा हिंड्नेछन्, अनि अल्लाह तआलाले मुनाफ़िकहरु (द्वयवादीहरु) माथि अन्धकार आच्छादित गरिदिनेछ, त्यस समय उनीहरु ईमानवालाहरुसित यो भन्नेछन् ।

[2]यसको अभिप्राय यो हो कि संसारमा गई त्यसैप्रकार ईमान तथा सत्कर्मको पूँजी ल्याउ जस्तो हामीले ल्याएका छौं । अथवा उपहास स्वरुप ईमान भएकाहरुले भन्नेछन् कि पछाडी जहाँबाट हामी प्रकाश ल्याएका थियौं त्यहीं गएर त्यसलाई खोज ।

[3]अर्थात् ईमान भएकाहरु तथा मुनाफ़िकहरु (द्वयवादिहरु) का बीच ।

[4]यसबाट अभिप्राय स्वर्ग हो जसमा ईमान भएकाहरु प्रवेश गरिसकेका हुनेछन् ।

[5]यो त्यो भाग हो जसमा नरक हुनेछ ।

[6]अर्थात् दीवारको छेक भइहाले पश्चात मुनाफ़िक, मुसलमानहरुसित भन्नेछन् कि हामी संसारमा तिम्रा साथ नमाज़ पढ्दैथ्यौं, ज़िहाद आदिमा भाग लिंदैनथ्यौ ?

[7]कि तिमीले आफ्ना हृदयहरुमा कुफ्र (इन्कार) तथा निफ़ाक (अवसरवाद) लुकाएर राखेका थियौ ।

الْأَمَانِيُّ حَتَّىٰ جَاءَ أَمْرُ اللَّهِ وَغَرَّكُم بِاللَّهِ الْغَرُورُ ﴿١٤﴾

रहयौ[1] र शंका एवं सन्देह गरिरहयो[2] तथा तिमीलाई तिम्रा (व्यर्थ) आकांक्षाहरुले धोकामा नै राखे,[3] यहाँसम्मकि अल्लाहको आदेश आइपुग्यो[4] तथा तिमीलाई अल्लाहका विषयमा धोका दिनेले धोकामा नै राख्यो ।[5]

فَالْيَوْمَ لَا يُؤْخَذُ مِنكُمْ فِدْيَةٌ وَلَا مِنَ الَّذِينَ كَفَرُوا ۚ مَأْوَاكُمُ النَّارُ ۖ هِيَ مَوْلَاكُمْ ۖ وَبِئْسَ الْمَصِيرُ ﴿١٥﴾

(१५) त आज न तिमीसित आर्थिक दण्ड (तथा न साटो) स्वीकार गरिनेछ तथा न काफिरहरुसित, तिमी सबैको वासस्थान नरक् हो । त्यही तिम्रो साथी हो । तथा त्यो नराम्रो वासस्थान हो ।

أَلَمْ يَأْنِ لِلَّذِينَ آمَنُوا أَن تَخْشَعَ قُلُوبُهُمْ لِذِكْرِ اللَّهِ وَمَا نَزَلَ مِنَ الْحَقِّ وَلَا يَكُونُوا

(१६) के अबसम्म ईमान भएकाहरुका लागि समय आएन कि उनका हृदय अल्लाहको यादबाट तथा जो सत्य अवतरित भइसकेको छ, त्यसबाट कोमल होऊन्[7] तथा ती मानिसहरुको

---

[1]कि सम्भवत: मुसलमान कुनै आपदाको शिकार हुन जाऊन् ।

[2]धर्मका विषयमा, यसैकारण न कुर्आनलाई माने न प्रमाण एवं चमत्कारहरुलाई ।

[3]जसमा शैतानलाई तिमीले फँसाएर राख्यौ ।

[4]अर्थात् तिमीलाई मृत्यु आइहाल्यो, अथवा अन्तमा मुसलमान विजयी भए तथा तिम्रा अभिलाषाहरु पूरा भएनन् ।

[5]अर्थात् अल्लाहको सहनशीलता तथा त्यसबाट अवसर दिनुका नियमका कारण तिमीलाई शैतानले धोकामा पारिराख्यो ।

[6]مَولى त्यसलाई भन्दछन् जो कसैका कामको संरक्षक अर्थात् उत्तरदायी बनोस्, मानौं अब नरक् नै यस कुराको उत्तरदायी छ कि कडाभन्दा कडा यातनाको स्वाद चखाओस् । केही ज्ञाताहरु भन्छन् कि सधैं साथमा रहनेलाई पनि मौला भन्दछन्, अर्थात् अब नरकको अग्नि नै नित्यका लागि उनको साथी तथा सङ्गी हुनेछ । केही अन्य भन्दछन् कि अल्लाह नरक्लाई पनि बुद्धि तथा समझ प्रदान गर्नेछ तथा त्यो काफिरहरुका विरुद्ध क्रोध एवं रोष देखाउनेछ । अर्थात् उनको साथी बन्नेछ तथा उनलाई दुखदायी यातना दिनेछ ।

[7]सम्बोधन ईमान भएकाहरुलाई छ तथा उद्देश्य उनको अल्लाहका स्मरणतिर अधिक ध्यान दिलाउनु तथा पवित्र कुर्आनबाट पथप्रदर्शन ग्रहण गर्नुको उपदेश दिनु हो । خشوع

كَالَّذِيْنَ اُوْتُوا الْكِتٰبَ مِنْ قَبْلُ فَطَالَ عَلَيْهِمُ الْاَمَدُ فَقَسَتْ قُلُوْبُهُمْ ؕ وَكَثِيْرٌ مِّنْهُمْ فٰسِقُوْنَ ﴿١٦﴾

जस्तो नहुन जाऊन् जसलाई यिनीभन्दा पूर्व किताब प्रदान गरिएको थियो,[1] अनि जब उनीमाथि एउटा लामो अवधि व्यतीत भइहाल्यो त उनका हृदय कठोर हुनपुगे,[2] तथा उनीहरुमा अधिकांश फ़ासिक (अवज्ञाकारी) छन् ।[3]

اِعْلَمُوْٓا اَنَّ اللّٰهَ يُحْيِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ؕ قَدْ بَيَّنَّا لَكُمُ الْاٰيٰتِ لَعَلَّكُمْ تَعْقِلُوْنَ ﴿١٧﴾

(१७) विश्वास गर कि अल्लाह नै धर्तीलाई त्यसको मृत्युको पश्चात जीवित गरिदिन्छ । हामीले त तिम्रा लागि आफ्ना निशानीहरु वर्णित गरिदियौं ताकि तिमी सम्झ ।

اِنَّ الْمُصَّدِّقِيْنَ وَالْمُصَّدِّقٰتِ وَاَقْرَضُوا اللّٰهَ قَرْضًا حَسَنًا يُّضٰعَفُ

(१८) नि:सन्देह दान दिने पुरुष एवं महिलाहरु तथा जो अल्लाहलाई प्रेम (शुद्धता) का साथ ऋण दिराखेका छन्, उनका लागि यो वढाइन

(खुशूअ्) को अर्थ हृदयहरु कोमल भई अल्लाहतिर झुक्नु, حق हक (सत्य) सित तात्पर्य पवित्र (ईशवाणी) कुरआन हो ।

[1]जस्तै यहूदी तथा इसाई हुन् अर्थात् तिमी उनी जस्तै नहुनु ।

[2]जस्तै उनीहरुले ईश्वरीय धर्मशास्त्रमा परिवर्तन तथा फेरबदल गरिदिए त्यसका साटो संसारको तुच्छ मूल्य प्राप्त गर्नलाई उनीहरुले आचरण बनाइहाले, त्यसका आदेशहरुको उल्लंघन गरे, अल्लाहका धर्ममा मानिसहरुको अनुगामी (मुक़ल्लिद) बनिहाले तथा उनलाई आफ्नो प्रभु बनाइहाले । मुसलमानहरुलाई सावधान गरिंदैछ कि तिमी यो काम नगर्नु अन्यथा तिम्रा हृदय पनि कठोर हुन जानेछन् तथा त्यसपछि यही कर्म जो उनका लागि अल्लाहको धिक्कारका कारण बने, तिमीलाई पनि राम्रा लाग्नेछन् ।

[3]अर्थात् उनका हृदय बिगडेका एवं कर्म व्यर्थ छन् । दोस्रो स्थानमा अल्लाहले भन्नुभयो :

﴿ فَبِمَا نَقْضِهِمْ مِّيْثَاقَهُمْ لَعَنّٰهُمْ وَجَعَلْنَا قُلُوْبَهُمْ قٰسِيَةً ۚ يُحَرِّفُوْنَ الْكَلِمَ عَنْ مَّوَاضِعِهٖ ۙ وَنَسُوْا حَظًّا مِّمَّا ذُكِّرُوْا بِهٖ ﴾

"अनि उनका वचन भङ्गका कारण हामीले उनीमाथि धिक्कार उतार्‍यौं तथा उनका हृदय कठोर गरिदियौं कि उनी वाणीलाई उनका स्थानबाट परिवर्तित गरिदिन्छन् तथा जे-जति उपदेश उनलाई गरिएको थियो त्यसको बहुत ठूलो अंश बिर्सिदिए ।" (अल-मायेद:-१३)

لَهُمْ وَلَهُمْ اَجْرٌ كَرِيْمٌ ⑱

छ ।[1] तथा उनका लागि राम्रा (प्रतिफल) एवं पुण्य छन् ।[2]

وَالَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَرُسُلِهٖٓ اُولٰٓئِكَ هُمُ الصِّدِّيْقُوْنَ ۖ وَالشُّهَدَآءُ عِنْدَ رَبِّهِمْ ۭ لَهُمْ اَجْرُهُمْ وَنُوْرُهُمْ ۭ وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَآ اُولٰٓئِكَ اَصْحٰبُ الْجَحِيْمِ ⑲

(१९) अल्लाह एवं त्यसका रसूल (सन्देष्टा) माथि जो ईमान स्वीकार गर्दछन्, ती नै मानिस आफ्नो प्रभुका निकट (सत्यवादी) माथि शहीद हुन् । उनका लागि उनको प्रतिफल तथा उनको दिव्य ज्योति हो, तथा जो कुफ्र गर्दछन् र हाम्रा निशानीहरुलाई झुठ्लाउँछन्, उनी नरकवासी हुन् ।

اِعْلَمُوْٓا اَنَّمَا الْحَيٰوةُ الدُّنْيَا لَعِبٌ

(२०) याद राख कि संसारिक जीवन केवल खेल तथा मनोरञ्जन र शोभा तथा आपसमा

[1]अर्थात् एकका प्रतिफल कमसेकम दस गुना तथा यसभन्दा अधिक सात सय गुना, बरु त्यसभन्दा पनि अधिक । यो अधिकता मनको शुद्धता तथा आवश्यकता एवं स्थान तथा समय अनुसार हुनसक्दछ । जस्तो पहिला वर्णन भयो कि जुन मानिसहरुले मक्का विजयभन्दा पहिला खर्च गरे, त्यो पुण्य तथा प्रतिफलमा उनीभन्दा अधिक हुनेछन् जसले त्यसका पश्चात खर्च गरे ।

[2]अर्थात् स्वर्ग तथा त्यसका सुख-सुविधाहरु जसको कहिल्यै विनाश तथा अन्त्य छैन । आयतमा مُصَّدِّقِيْن वास्तवमा مُتَصَدِّقِيْن हो, त लाई स सित परिवर्तन गरेर स मा संयुक्त गरिदियो ।

[3]केही व्याख्याकारहरुले यहाँ वक्फ़ (विराम) गरेका छन् तथा अगाडी وَ الشُّهَدَآء लाई (अलग) वाक्य मानेका छन् । صديقيت (सिद्दीक़ियत) पूर्ण विश्वास तथा पूर्ण सच्चाई एवं शुद्धताको नाम हो । हदीसमा वर्णन छ कि "मनुष्य सधैं साँचो बोल्दछ तथा साँचो कै खोजीमा तथा प्रयत्नमा लागिरहन्छ यहाँसम्मकि अल्लाहका सदनमा सिद्दीक लेखिन्छ ।" (मुत्तफ़कुन् अलैहि, मिश्कात किताबुल आदाब, बाबु हिफ्ज़िल लेसान) एक अरु हदीसमा सिद्दीकहरु (सत्यवादीहरु) को त्यो स्थान भनिएको छ जो स्वर्गमा उनलाई प्राप्त हुनेछ । भन्नुभयो, "जन्नती आफ्ना माथिका अटारीहरुवालालाई यस्तो देख्नेछन् जस्तै तिमी चम्किराखेको पश्चिमी अथवा पूर्वी तारालाई क्षितिजमा देख्दछौ ।" अर्थात् उनका बीच पदहरुको यति अन्तर हुनेछ । सहावा (नबीका सहचरहरु) ले सोधे कि यी अम्बियाका श्रेणी हुनेछन् जसलाई अरुले प्राप्त गर्न सक्ने छैनन् ? उहाँले भन्नुभयो हो, सौगन्ध छ त्यस प्रभुको जसका हातमा मेरो प्राण छ ! यी ती मानिसहरु हुन् जसले अल्लाहकाप्रति विश्वास गरे तथा ईशदूतहरुलाई सच्चा माने । (सहीह बुख़ारी, किताबु बदइल ख़ल्क़, बाबु माजाअ फ़ी सिफ़तिल जन्नते व अन्नहा मख़लूकतुन्) अर्थात् ईमान तथा पुष्टिकरणको माँग पूरा गरे । (फ़तहुल बारी)

وَّلَهْوٌ وَّزِيْنَةٌ وَّتَفَاخُرٌۢ بَيْنَكُمْ وَتَكَاثُرٌ فِي الْاَمْوَالِ وَالْاَوْلَادِ ۭ كَمَثَلِ غَيْثٍ اَعْجَبَ الْكُفَّارَ نَبَاتُهٗ ثُمَّ يَهِيْجُ فَتَرٰىهُ مُصْفَرًّا ثُمَّ يَكُوْنُ حُطَامًا ۭ وَفِي الْاٰخِرَةِ عَذَابٌ شَدِيْدٌ ۙ وَّمَغْفِرَةٌ مِّنَ اللّٰهِ وَرِضْوَانٌ ۭ وَمَا الْحَيٰوةُ الدُّنْيَآ اِلَّا مَتَاعُ الْغُرُوْرِ ⑳

गर्व (एवं अहंकार) तथा धन एवं सन्तानमा एक-अर्काभन्दा स्वयं आफूलाई अधिक भन्नु हो, जस्तै वर्षा तथा त्यसको उपज किसानहरुलाई[1] राम्रो लाग्दछ, अनि जब त्यो सुकेर जान्छ त पहेंलो रङ्गमा तिमी त्यसलाई देख्दछौ, अनि त्यो पूर्णतः टुक्रा-टुक्रा हुनजान्छ ।[2] तथा आख़िरत (परलोक) मा कठोर यातनाहरु[3] तथा अल्लाहको क्षमा एवं प्रसन्नता छ[4] तथा सांसारिक जीवन केवल धोकाका साधनका अतिरिक्त केही पनि त होइन ।[5]

سَابِقُوْٓا اِلٰى مَغْفِرَةٍ مِّنْ رَّبِّكُمْ

(२१) (आउ) दगुर आफ्नो प्रभुको क्षमातिर[6] तथा त्यस स्वर्गतिर जसको

[1]'कुफ़्फ़ार' किसानहरुलाई भनिएको छ, यसकारण कि यसको शाब्दिक अर्थ हो लुकाउनेवाला काफ़िरहरुका हृदयमा अल्लाह तथा परलोकको इन्कार लुकेको हुन्छ, यसकारणले उसलाई काफ़िर भनिन्छ । किसानहरुको लागि यो शब्द यसकारण प्रयोग गरिएको छ कि तिनीहरुले पनि धर्तीमा बीउ छर्छन् तथा तिनलाई लुकाइदिन्छन् ।

[2]यहाँ सांसारिक जीवनलाई शीघ्र समाप्त हुने कुरोलाई खेतीले उपमा दिएको छ कि जुनप्रकार खेती हरियो हुन्छ त राम्रो लाग्छ जसलाई देखेर किसान अति प्रसन्न हुन्छन्, परन्तु त्यो शीघ्र नै सुकेको र पहेंलो भएर चुर्ण-चुर्ण हुनजान्छ । यसैप्रकार संसारको शोभा एवं सुन्दरता धन तथा सन्तान एवं अन्य वस्तुहरु मनुष्यको मन लोभ्याउँछन्, किन्तु यो जीवन केही दिनकै नै छ, यसलाई पनि स्थायित्व एवं स्थिरता छैन ।

[3]अर्थात् काफ़िर तथा अवज्ञाकारीहरुका लागि जो संसारका खेलकूदमा मँग्न छन् तथा त्यसलाई नै उनीहरुले जीवनको लक्ष्य ठाने ।

[4]अर्थात् ईमान भएका तथा आज्ञाकारीहरुका लागि जसले संसारलाई नै सबैथोक ठानेनन्, बरु यसलाई सामयिक तथा नाशवान एवं परीक्षागृह ठान्दै अल्लाहको आज्ञाका अनुसार जीवन निर्वाह गरे ।

[5]किन्तु उसका लागि जो धोकामा फँसिरहयो तथा परलोकका लागि केही गरेन परन्तु जसले यस संसारलाई परलोकका खोजीका लागि प्रयोग गऱ्यो त उसका लागि यही संसार त्यसभन्दा उत्तम जीवन प्राप्त गर्नुको साधन सिद्ध हुनेछ ।

[6]अर्थात् सदाचार एवं स्वच्छ मनले क्षमा-याचना गऱ्यो किनकि यिनै कुरा प्रभुका क्षमादानको साधन हो ।

وَجَنَّةٍ عَرْضُهَا كَعَرْضِ السَّمَاءِ وَالْأَرْضِ ۙ أُعِدَّتْ لِلَّذِينَ آمَنُوا بِاللَّهِ وَرُسُلِهِ ۚ ذَٰلِكَ فَضْلُ اللَّهِ يُؤْتِيهِ مَنْ يَشَاءُ ۚ وَاللَّهُ ذُو الْفَضْلِ الْعَظِيمِ ﴿٢١﴾

विस्तार आकाश एवं धर्तीका विस्तारका बराबर छ ।[१] यो उनका लागि बनाइको छ जो अल्लाहमाथि तथा त्यसका रसूलहरु (सन्देष्टाहरु) माथि ईमान स्वीकार गर्दछन् । यो अल्लाहको कृपा हो जसलाई चाहन्छ प्रदान गर्दछ,[२] तथा अल्लाह अत्यन्त कृपालु छ ।[३]

مَا أَصَابَ مِنْ مُصِيبَةٍ فِي الْأَرْضِ وَلَا فِي أَنْفُسِكُمْ إِلَّا فِي كِتَابٍ مِنْ قَبْلِ أَنْ نَبْرَأَهَا ۚ إِنَّ ذَٰلِكَ

(२२) न कुनै कठिनाई (संकट) संसारमा आउँछ[४] न विशेष तिम्रा प्राणहरुमाथि[५] परन्तु यसभन्दा पूर्व कि हामीले त्यसलाई उत्पन्न गरौं, त्यो एउटा विशेष किताबमा लेखिएको छ ।[६] निःसन्देह

[१]तथा जसको विस्तार यति छ त्यसको लम्बाई कति होला ? किनकि लम्बाई चौडाइभन्दा अधिक नै हुन्छ ।

[२]स्पष्ट कुरो छ कि उसको इच्छा उसैका लागि हुन्छ जो कुफ्र तथा दूराचारबाट क्षमा माँगेर ईमान तथा सदाचारको जीवन अपनाउँछ, यसैले त्यो यस्ता मानिसहरुलाई ईमान तथा पुण्यका कर्महरुको सौभाग्य पनि प्रदान गर्दछ ।

[३]त्यसले जसमाथि चाहन्छ आफ्नो दया गर्दछ । जसलाई त्यसले केही दिन्छ, कसैले रोक्न सक्दैन तथा जसबाट रोकिदिन्छ कसैले दिन सक्दैन । सबै भलाई त्यसैका हातमा छन्, त्यही पूर्ण दयानिधि तथा वास्तविक दाता हो, जसकहाँ कन्जूसीको कुनै कल्पना छैन ।

[४]जस्तै अकाल, बाढी तथा अन्य धर्ती तथा आकाशका अन्य विपदाहरु ।

[५]जस्तै रोग, थकान, दरिद्रता आदि ।

[६]अर्थात् अल्लाहले आफ्ना ज्ञान अनुसार पुरै सृष्टिलाई पैदा गर्नुभन्दा पहिला नै यी सबै कुरा लेखिदिए । जस्तो हदीसमा छ, नबी सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो : «قَدَّرَ اللهُ الْمَقَادِيرَ قَبْلَ أَنْ يَخْلُقَ السَّمٰوَاتِ وَالْأَرْضَ بِخَمْسِينَ أَلْفَ سَنَةٍ».

"अल्लाहले आकाश तथा धर्ती पैदा गर्नुभन्दा पचास हजार वर्ष पहिला नै सबै भाग्य लेखिदिनुभएको थियो ।" (सहीह मुस्लिम, किताबुल क़द्र, बाबु हिज़ाजे आदम व मूसा अलैहिस्सलाम)

عَلَى اللّٰهِ يَسِيْرٌ ۝

यो कार्य अल्लाह (तआ़ला) का लागि (अत्यन्त) सरल छ ।

لِّكَيْلَا تَاْسَوْا عَلٰى مَا فَاتَكُمْ وَلَا تَفْرَحُوْا بِمَآ اٰتٰىكُمْ ؕ وَاللّٰهُ لَا يُحِبُّ كُلَّ مُخْتَالٍ فَخُوْرِ ۝

(२३) ताकि तिमी आफूबाट खोसिएका वस्तुमाथि दुखी नहुने गर तथा न प्रदान गरिएको कुरामाथि गर्व गर्न थाल,[1] तथा गर्व गर्ने अहंकारीहरुसित अल्लाह प्रेम गर्दैन ।

الَّذِيْنَ يَبْخَلُوْنَ وَيَاْمُرُوْنَ النَّاسَ بِالْبُخْلِ ؕ وَمَنْ يَّتَوَلَّ فَاِنَّ اللّٰهَ هُوَ الْغَنِيُّ الْحَمِيْدُ ۝

(२४) जो (स्वयं पनि) कन्जुसी गर्दछन् तथा अरुहरुलाई (पनि) कन्जुसीको शिक्षा दिइन्छन् । (सुन !) जो पनि विमुख हुन्छन्,[2] अल्लाह निस्पृह तथा प्रशंसाका योग्य छ ।

لَقَدْ اَرْسَلْنَا رُسُلَنَا بِالْبَيِّنٰتِ وَاَنْزَلْنَا مَعَهُمُ الْكِتٰبَ وَالْمِيْزَانَ لِيَقُوْمَ النَّاسُ بِالْقِسْطِ ۚ وَاَنْزَلْنَا الْحَدِيْدَ فِيْهِ بَاْسٌ

(२५) नि:सन्देह हामीले आफ्ना सन्देष्टाहरुलाई खुला निशानीहरु प्रदान गरी पठायौं तथा उनका साथ किताब तथा न्याय (तुला) अवतरित गऱ्यौं[3] ताकि मानिस न्यायमा स्थित रहून् तथा हामीले फलामलाई पनि अवतरित गऱ्यौं[4] जसमा अत्यन्त

[1]यहाँ जुन शोक तथा प्रसन्नताबाट रोकिएको छ, यो त्यो शोक तथा प्रसन्नता हो जो मानिसहरुलाई अवैध कामहरुसम्म पुऱ्याउँछ । अन्यथा दुखमाथि शोक तथा सुखमाथि प्रसन्नता एउटा स्वभाविक कर्म हो, किन्तु मोमिन दुखमाथि धैर्यधारण गर्दछ कि अल्लाहको इच्छा तथा भाग्यलेख हो, रुनु चिच्याउनुबाट परिवर्तन हुनसक्दैन, तथा सुखमाथि घमण्ड गर्दैन । अल्लाहको कृतज्ञ हुन्छ कि यो मात्र त्यसका प्रयासको फल होइन बरु अल्लाहको दया एवं त्यसको उपकार हो ।

[2]अर्थात् अल्लाहको मार्गमा खर्च गर्नाले, किनकि वास्तविक कृपणता (कन्जूसी) यही हो।

[3] ميزان मीज़ान (तुला) सित अभिप्राय न्याय हो तथा प्रयोजन यो हो कि हामीले मानिसहरुलाई न्याय गर्न आदेश दिएका छौं । केही ज्ञाताहरुले यसको अनुवाद तुला गरेका छन् । तराजू उतार्नाले अभिप्राय हो कि हामीले तराजूतिर मानिसहरुलाई मार्ग दर्शायौं कि त्यसकाद्वारा मानिसहरुलाई तौलेर उनको पूरा-पूरा अधिकार देउ ।

[4]यहाँ पनि उतार्यौंको अर्थ हो पैदा गर्नु तथा त्यसको कला सिकाउनु । फलामबाट असंख्य वस्तुहरु बन्दछन् । यो सब अल्लाहका त्यस निर्देश तथा दिव्य प्रकाशनाको परिणाम हो जो उसले मनुष्यलाई गरेको छ ।

شَدِيۡدٌ وَّمَنَافِعُ لِلنَّاسِ وَلِيَعۡلَمَ اللّٰهُ مَنۡ يَّنۡصُرُهٗ وَرُسُلَهٗ بِالۡغَيۡبِ ؕ اِنَّ اللّٰهَ قَوِىٌّ عَزِيۡزٌ ﴿٢٥﴾

(भयानकता एवं) शक्ति छ[1] तथा मानिसहरुका लागि अन्य पनि धेरै लाभ छन्,[2] तथा यसकारण पनि कि अल्लाहले जानोस् कि त्यसको तथा सन्देष्टाहरुको सहायता नदेखिकन कसले गर्दछ ।[3] निःसन्देह अल्लाह (तआला) शक्तिशाली एवं सामर्थ्यवान छ ।[4]

وَلَقَدۡ اَرۡسَلۡنَا نُوۡحًا وَّاِبۡرٰهِيۡمَ وَجَعَلۡنَا فِىۡ ذُرِّيَّتِهِمَا النُّبُوَّةَ وَالۡكِتٰبَ فَمِنۡهُمۡ مُّهۡتَدٍ ۚ وَكَثِيۡرٌ مِّنۡهُمۡ فٰسِقُوۡنَ ﴿٢٦﴾

(२६) निःसन्देह हामीले नूह एवं इब्राहीम (अलैहिस्सलाम) लाई (सन्देष्टा बनाएर) पठायौं तथा हामीले ती दुबैको सन्तानमा पैगम्बरी (दूतत्व) तथा किताब जारी राख्यौं, त उनीमध्ये केही मार्गमा आए तथा उनीमध्ये निकै अधिक अवज्ञाकारी रहे ।

ثُمَّ قَفَّيۡنَا عَلٰٓى اٰثَارِهِمۡ بِرُسُلِنَا

(२७) उनका पश्चात तैपनि हामीले निरन्तर आफ्ना सन्देष्टाहरुलाई पठाइरहयौं तथा उनका

---

[1]अर्थात् फलामबाट अस्त्र-शस्त्र बन्दछन्, जस्तै तलवार, बन्दूक तथा अब परमाणु बम, तोपहरु, युद्ध तोप, पनडुब्बिहरु, रकेट, टैंक आदि असंख्य वस्तुहरु जसबाट शत्रुमाथि आक्रमण गरिन्छ तथा आफ्नो रक्षा पनि ।

[2]अस्त्र-शस्त्रका अतिरिक्त फलामबाट अरु पनि धेरै सामान बन्दछन् जो घरहरु तथा विभिन्न उद्योगहरुमा काम आउँछन्, जस्तै छुरी, चक्कू, कैंची, हथौडा, सुई, खेती, काठ तथा निर्माण आदिका सामान तथा साना-ठूला अनगिन्ती मेशीन तथा सामाग्रीहरु ।

[3]यो لِيَعۡلَمَ को संयोजक हो, अर्थात् रसूलहरुलाई यसकारण पठायौं ताकि त्यो जानोस् कि त्यसका रसूलहरुमाथि अल्लाहलाई नदेखिकनै कसले विश्वास गर्दछ तथा उनको सहायता गर्दछ ।

[4]त्यसलाई यसको जरुरत छैन कि मानिस त्यसका धर्मको तथा त्यसका रसूलहरुको सहायता गरून्, बरु त्यो चाहन्छ भने त्यस बिना नै उनलाई प्रभुत्व प्रदान गरिदेओस् । मानिसहरुलाई त उनको सहायता गर्नुको आदेश उनको आफ्नै भलाईका लागि दिएको छ ताकि उनी यस ढङ्गले आफ्ना प्रभुलाई प्रसन्न गरी त्यसको दया तथा क्षमाका पात्र बन्न जाऊन् ।

وَقَفَّيْنَا بِعِيسَى ابْنِ مَرْيَمَ وَآتَيْنَاهُ الْإِنجِيلَ وَجَعَلْنَا فِي قُلُوبِ الَّذِينَ اتَّبَعُوهُ رَأْفَةً وَرَحْمَةً وَرَهْبَانِيَّةً ابْتَدَعُوهَا مَا كَتَبْنَاهَا عَلَيْهِمْ إِلَّا ابْتِغَاءَ رِضْوَانِ اللَّهِ فَمَا رَعَوْهَا حَقَّ رِعَايَتِهَا فَآتَيْنَا

पश्चात हामीले ईसा पुत्र मरियमलाई पठायौं तथा उनलाई इंजील प्रदान गर्‍यौं तथा उनका अनुयायीहरुका हृदयमा प्रेम तथा दयाको भाव राखिदियौं ।[1] हो बैराग्य त उनीहरुले स्वयं खोजिहालेका थिए[2] हामीले उनीमाथि आवश्यक गरेका थिएनौं,[3] अल्लाहको प्रसन्नताको खोजीका अतिरिक्त ।[4] तथा उनीहरुले त्यसको पूर्ण पालना

[1] رَأْفَةً (राफ़:) को अर्थ हो कोमलता तथा रहमतको अर्थ हो दया । अनुयायीहरुसित अभिप्राय ईसा अलैहिस्सलामका साथी हवारी हुन् । अर्थात् उनका हृदयमा एक-अर्काका लागि प्रेम तथा प्यारको भाव उत्पन्न गरिदियौं, जस्तो सहाबा किराम रज़ीयल्लाहु अन्हुम परस्पर प्रेम तथा दयाभाव गर्नेहरु थिए । رُحَمَاءُ بَيْنَهُمْ (यहूदी यसप्रकार आपसमा प्रेमभाव राख्दैनथे जस्तो आदरणीय ईसाका अनुयायीहरु थिए ।

[2] رَهْبَانِيَّةً (रहबानियत) رَهَبٌ रहब (भय) बाट बनेको छ अथवा رُهْبَانٌ रूहबान (फकी़र) सित सम्बन्धित छ । यसलाई رهبنة बाट मानिन्छ भने यसको धातु رهبيت (रहिबीयत) हो, यसमा 'नून' बढाएर रहबानीयत बनाइएको छ । (ऐसरुत्तफ़ासीर) रहबानीयतको अर्थ वैराग्य हो, अर्थात् संसारबाट सम्बन्ध त्याग गरी वनमा गएर अल्लाहको उपासना गर्नु । यसको पृष्ठभूमि यो हो कि ईशदूत ईसाका पश्चात यस्ता राजा भए जसले तौरात तथा इंजीलमा परिवर्तन गरिदिए जसलाई एउटा गिरोहले मानेन तथा राजाका भयले पर्वतहरु एवं गुफामा शरण लिए । यो त्यसको आरम्भ थियो, जसको आधार विवशता थियो । किन्तु पछिका मानिसहरुले आफ्ना ठूलाहरुका अन्धा-अनुशरणमा यस नगरलाई त्यागेर उपासनाको एउटा नयाँ ढङ्ग बनाए तथा स्वयंलाई गिर्जाघरहरु तथा पूजा स्थलहरुमा बन्द गरे तथा त्यसका लागि संसारमा त्याग एवं वैराग्यलाई पनि अनिवार्य गरिहाले । त्यसैलाई अल्लाहले ابتداع (स्वयं रच्नु) भनेको छ ।

[3] यो पछिल्लो कुराकै पुष्टि हो कि यो वैराग्य उनले स्वयं बनाएका थिए, अल्लाहले त्यसको आज्ञा दिएन ।

[4] अर्थात् हामीले त उनीमाथि अनिवार्य गरेका थियौं कि हाम्रो प्रसन्नताको खोजी गरुन् । दोस्रो अनुवाद यो गरिएको छ कि उनले यो काम अल्लाहलाई खुश गर्नका लागि गरेका थिए, किन्तु अल्लाहले स्पष्ट गरिदियो कि अल्लाहको प्रसन्नता धर्ममा आफ्नो तर्फबाट नयाँ कुरा बनाउनाले प्राप्त हुनसक्दैन, चाहे ती जति नै मनोरम किन नहोउन् । अल्लाहको प्रसन्नता त त्यसका अनुपालनबाट नै प्राप्त हुन्छ ।

ٱلَّذِينَ ءَامَنُوا۟ مِنْهُمْ أَجْرَهُمْ ۖ وَكَثِيرٌ مِّنْهُمْ فَٰسِقُونَ ﴿٢٧﴾

गरेनन्,[1] तैपनि हामीले उनीहरुमध्ये जसले ईमान स्वीकार गरेका थिए उनीहरुलाई उनको प्रतिफल दियौं,[2] तथा उनीहरुमा अधिकतर मानिस छन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ ٱتَّقُوا۟ ٱللَّهَ وَءَامِنُوا۟ بِرَسُولِهِۦ يُؤْتِكُمْ كِفْلَيْنِ مِن رَّحْمَتِهِۦ وَيَجْعَل لَّكُمْ نُورًا تَمْشُونَ بِهِۦ وَيَغْفِرْ لَكُمْ ۚ وَٱللَّهُ غَفُورٌ رَّحِيمٌ ﴿٢٨﴾

(२८) हे मानिसहरु जसले ईमान स्वीकार गरेका छौ, अल्लाहसित तर्सदै रह तथा त्यसका सन्देष्टामाथि ईमान स्वीकार गर, अल्लाहले तिमीलाई आफ्नो दयाको दुईगुना भाग प्रदान गर्नेछ[3] तथा तिमीलाई दिव्य ज्योति प्रदान गर्नेछ, जसका प्रकाशमा तिमी हिंड्ने-डुल्ने छौ तथा (तिम्रा पाप पनि क्षमा गरिदिनेछ, अल्लाह क्षमा गर्ने दयावान छ ।

لِّئَلَّا يَعْلَمَ أَهْلُ ٱلْكِتَٰبِ أَلَّا يَقْدِرُونَ عَلَىٰ شَىْءٍ مِّن فَضْلِ ٱللَّهِ ۙ وَأَنَّ ٱلْفَضْلَ بِيَدِ ٱللَّهِ يُؤْتِيهِ مَن يَشَآءُ ۚ وَٱللَّهُ ذُو ٱلْفَضْلِ ٱلْعَظِيمِ ﴿٢٩﴾

(२९) यो यसकारण कि अहले किताब[4] (ग्रन्थवालाहरु) जानीहालून् कि अल्लाहको कृपाका कुनै अंशमा पनि उनीहरुलाई अधिकार छैन तथा यो कि समस्त कृपा अल्लाहका हातमा छ, त्यो जसलाई चाहन्छ प्रदान गर्दछ, तथा अल्लाह नै अत्यन्त कृपालु छ ।

[1]अर्थात् उनीहरुले उद्देश्य अल्लाहको प्रसन्नताको खोज भने, किन्तु उनीहरुले पूरा पालन गरेनन्, अन्यथा उनीहरु नयाँ कुरा बनाउनुको साटो अनुसरणको मार्ग अपनाउँथे ।

[2]यी ती मानिस हुन् जो ईसाका धर्ममा अटल रहेका थिए ।

[3]यो दुईगुना प्रतिफल ती ईमानवालाहरुलाई प्राप्त हुनेछ जो नबी सल्लल्लाहु अलैहि व सल्लमभन्दा पहिलाका नबीमाथि ईमान स्वीकार गर्दथे अनि उहाँ सल्लल्लाहु अलैहि व सल्लममाथि पनि ईमान स्वीकार गरे, जस्तो कि हदीसमा वर्णित छ । ( सहीह-अल-बुख़ारी, किताबुल इल्म, सहीह मुस्लिम, किताबुल ईमान, बाबु वजूबिल ईमान बिर्सिसालति नबियूयेना) एउटा अर्को व्याख्याका अनुसार जब अहले किताबले यस कुरामा गर्वको प्रदर्शन गरे कि उनीहरुलाई दुईगुना पुण्य प्राप्त हुनेछ त अल्लाहले मुसलमानहरुका पक्षमा यो आयत उतार्‍यो । विस्तारका लागि तफ़सीर इब्ने क़सीर हुर्नुस् ।

[4] لِئَلَّا मा لا अधिक छ तथा अर्थ हो ليعلم أهل الكتاب أنهم لا يقدرون على أن ينالوا شيئا من فضل الله "ताकि अहले किताब जानिहालून् कि उनीहरु कुनै कुरामाथि सक्षम छैनन् कि अल्लाहको कृपा र वरदान पाउन सकून् ।" (फ़तहुल क़दीर)

## सूरतुल मुजादिलः-५८

سُوْرَةُ الْمُجَادَلَةِ

सूरः मुजादिलः मदीनामा अवतरित भएको तथा यसमा बाइस आयतहरु एवं तीन रुकूअ छन्।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ।

قَدْ سَمِعَ اللّٰهُ قَوْلَ الَّتِيْ تُجَادِلُكَ فِيْ زَوْجِهَا وَتَشْتَكِيْٓ اِلَى اللّٰهِ ۖ وَاللّٰهُ يَسْمَعُ تَحَاوُرَكُمَا ۗ اِنَّ اللّٰهَ سَمِيْعٌۢ بَصِيْرٌ ①

(१) निश्चय अल्लाह (तआ़ला) ले त्यस स्त्रीको कुरा सुन्यो जो तिमीसित आफ्ना पतिका विषयमा विवाद गरिराखेकी थिई तथा अल्लाहका समक्ष गुनासो गरिराखेको थियो, अल्लाह (तआ़ला) ले तिमी दुबैका कुराकानी (वाद-विवाद) सुनिराखेको थियो, निःसन्देह अल्लाह (तआ़ला) सुन्ने-देख्नेवाला छ।

اَلَّذِيْنَ يُظٰهِرُوْنَ مِنْكُمْ مِّنْ نِّسَآئِهِمْ

(२) तिमीहरुमध्ये जो मानिस आफ्ना पत्नीहरुसित ज़िहार गर्दछन् (अर्थात् उनीहरुलाई आमा भनी

[1]यो संकेत हो आदरणीय खौ़लः पुत्री मालिक पुत्र सालबा रज़ी अल्लाहु अन्हाका घटनातिर, कि जसका पति आदरणीय औस पुत्र सामितले उनीसित जिहार गरिहालेका थिए। ज़िहारको अर्थ हो, आफ्नी पत्नीलाई भनिदिनु, (أَنْتِ عَلَيَّ كَظَهْرِ أُمِّي) (तिमी मेरा लागि मेरी आमाको पिठ्यूँको समान छौ) अज्ञान युगमा ज़िहारलाई तलाक़ (विवाह-विच्छेद) ठानिन्थ्यो। आदरणीय खौ़लः अति व्याकुल भइन्। त्यस समयसम्म यस विषयमा कुनै आदेश उत्रेको थिएन। यसकारण उनी नबी सल्लल्लाहु अलैहि व सल्लमका पास आइन् त उहाँ पनि केही रोकिइरहनु भयो। उनी उहाँसँग विवाद तथा छलफल गर्दैरहिन् जसमा यी आयतहरु अवतरित भए, जसमा ज़िहारको समस्या तथा त्यसको आदेश एवं प्रायश्चितको वर्णन गरियो। (अबू दाऊद किताबुत्तलाक़, बाबुन फिज् ज़िहार) आयशा (رضي الله عنها) भन्नुहुन्छ कि अल्लाह तआ़ला कसरी मानिसहरुको कुरा सुनिहाल्छ कि यो स्त्री घरका एक कुनामा रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमसित छलफल गर्दथिन् तथा आफ्नो पतिको निन्दा गरिराखेकी थिई, म त्यसको कुरा सुन्दिनथें, परन्तु अल्लाहले आकाशका माथिबाट त्यसको कुरा सुनिहाल्नु भयो। (इब्ने माजा, अलमुकद्दमा, बाबुन फीमा अंकरतिल जहमियतु) बुखारीमा पनि तालीकका रुपमा यसको संक्षिप्त वर्णन छ। किताबुद तौहीद, बाबु कौलिल्लाहे तआ़ला व कानल्लाहु समीअन बसीरा)

مَّا هُنَّ أُمَّهَٰتِهِمْ ۖ إِنْ أُمَّهَٰتُهُمْ إِلَّا ٱلَّٰٓـِٔى وَلَدْنَهُمْ ۚ وَإِنَّهُمْ لَيَقُولُونَ مُنكَرًا مِّنَ ٱلْقَوْلِ وَزُورًا ۚ وَإِنَّ ٱللَّهَ لَعَفُوٌّ غَفُورٌ ۝٢

भनिहाल्छन्) उनी वास्तवमा उनका माताहरु होइनन्, उनकी माताहरु त ती नै हुन् जसका गर्भबाट उनले जन्म लिएका छन्,[1] निःसन्देह यी मानिस एउटा अनुचित एवं असत्य कुरा भन्दछन् । निःसन्देह अल्लाह (तआला) क्षमाशील एवं माफ गर्नेवाला छ ।[2]

وَٱلَّذِينَ يُظَٰهِرُونَ مِن نِّسَآئِهِمْ ثُمَّ يَعُودُونَ لِمَا قَالُوا۟ فَتَحْرِيرُ رَقَبَةٍ مِّن قَبْلِ أَن يَتَمَآسَّا ۚ ذَٰلِكُمْ

(३) तथा जो मानिस आफ्ना पत्नीहरुसित ज़िहार गर्दछन् अनि आफ्ना भनिएका कुराहरु फिर्ता लिन्छन्,[3] त उनीमाथि आपसमा एक-अर्कालाई हात लगाउनुभन्दा पूर्व[4] एउटा दासलाई मुक्त गर्नुछ

[1]यो ज़िहारको आदेशले भन्यो कि तिमीले भनिदिनाले तिम्रो पत्नी तिम्री आमा बन्नेछैन । यदि कोही आफ्नो छोरी अथवा बहिनीको पिठ्यूँको समान आफ्नी पत्नीलाई भन्दिन्छ भने यो ज़िहार हो अथवा होइन ? इमाम मालिक तथा इमाम अबू हनीफ़ा यसलाई पनि ज़िहार मान्दछन्, जबकि अन्य धर्मविद त्यसलाई ज़िहार मान्दैनन् (प्रथम कथन नै सही लाग्दछ) । यसैप्रकार यसमा पनि मतभेद छ कि यदि कोही पिठ्यूँको साटो यो भन्छ कि तिमी मेरी आमाको समान छौ, पिठ्यूँको नाम नलेओस्, त विद्वान भन्छन् कि यदि त्यो ज़िहारका विचारले उक्त शब्द भन्नेछ भने ज़िहार हुनेछ अन्यथा हुँदैन । इमाम अबू हनीफ़ा भन्नुहुन्छ कि यदि यस्ता अङ्गले उपमा दिनेछ जसलाई देख्नु वैध (जायज़) छ भने यो ज़िहार हुनेछैन । इमाम शाफ़ई पनि भन्नुहुन्छ कि ज़िहार केवल पिठ्यूँका समान भन्नाले नै हुनेछ । (फ़तहुल क़दीर)

[2]यसैले उसले प्रायश्चितलाई यस अप्रिय तथा झूठा कुराको साधन बनाइदियो ।

[3]अब त्यस आदेशको विवरण भनिंदैछ । कुरा फिर्ता लिनुको अर्थ हो, पत्नीसित संभोग गर्न चाहनू ।

[4]अर्थात् संभोगभन्दा पहिला उनी प्रायश्चित गरुन् । (१) एउटा दास मुक्त गर्नु । (२) यसको क्षमता नभएमा निरन्तर अटूट रुपमा दुई महीनाका ब्रत । यदि बीचमा धार्मिक कारणविना ब्रत छोडिदियो भने सुरुदेखि ब्रत बस्नुपर्नेछ । धार्मिक कारणसित अभिप्राय रोग अथवा यात्रा हो । इमाम अबू हनीफ़ा भन्नुहुन्छ कि रोग आदिका कारणले पनि ब्रत छाड्नेछ भने फेरिबाट ब्रत बस्नुपर्नेछ । (३) यदि निरन्तर दुई महिना ब्रत बस्नुको शक्ति छैन भने ६० निर्धनहरुलाई खाना खुवाओस् । केही धर्मविद भन्दछन् कि प्रत्येक गरीबलाई दुई मुद्द (आधा साअ अर्थात सवा किलो), केही अन्य भन्दछन् कि एक मुद्द (आधा साअ अर्थात सवा किलो) पर्याप्त छ किन्तु क़ुरआनका शब्दहरुबाट लाग्दछ कि भोजन यस्तो गराइयोस् कि उनको पेट भरोस् अथवा यति नै मात्रामा

تُوْعَظُوْنَ بِهٖ ۭ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ③

यसकाद्वारा तिमी उपदेश दिइन्छौ । तथा अल्लाह (तआ़ला) तिम्रा सबै कर्महरुसित परिचित छ ।

فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ شَهْرَيْنِ مُتَتَابِعَيْنِ مِنْ قَبْلِ اَنْ يَّتَمَاۗسَّا ۚ فَمَنْ لَّمْ يَسْتَطِعْ فَاِطْعَامُ سِتِّيْنَ مِسْكِيْنًا ۭ ذٰلِكَ لِتُؤْمِنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ ۭ وَتِلْكَ حُدُوْدُ اللّٰهِ ۭ وَلِلْكٰفِرِيْنَ عَذَابٌ اَلِيْمٌ ④

(४) हो, जो व्यक्ति पाउँदैन त्यसका लागि दुई महिनाको निरन्तर ब्रत छ यसभन्दा पूर्व कि एक-अर्कालाई हात लगाउनु, तथा जुन व्यक्तिको यो पनि शक्ति छैन, त्यसले साठ्ठी निर्धनहरुलाई भोजन गराउनु पर्नेछ । यो यसकारण कि तिमी अल्लाहमाथि तथा त्यसका सन्देष्टामाथि ईमान स्वीकार गर । यी अल्लाह (तआ़ला) का निर्धारित गरिएका सीमाहरु हुन् तथा काफ़िरहरुका लागि दुखदायी यातना हो ।

اِنَّ الَّذِيْنَ يُحَاۗدُّوْنَ اللّٰهَ وَرَسُوْلَهٗ كُبِتُوْا كَمَا كُبِتَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ وَقَدْ اَنْزَلْنَآ اٰيٰتٍۢ بَيِّنٰتٍ ۭ وَلِلْكٰفِرِيْنَ عَذَابٌ مُّهِيْنٌ ⑤

(५) निःसन्देह जो मानिस अल्लाह तथा त्यसका सन्देष्टाको विरोध गर्दछन् उनी अपमानित गरिनेछन् जस्तो उनीभन्दा पूर्वका मानिस अपमानित गरिए ।[२] तथा निःसन्देह हामीले खुल्ला आयतहरु अवतरित गरिसकेका छौं, तथा काफ़िरहरुका लागि अपमानकारी यातना छ ।

उनीहरुलाई खान दिइयोस् । एकैपटक सबैलाई खुवाउन पनि जरुरी छैन, कैयन् पटकमा यो संख्या पूरा गर्न सकिन्छ । (फ़तहुल क़दीर) तैपनि यो आवश्यक छ कि जबसम्म यो संख्या पूरा हुँदैन, त्यस समयसम्म पत्नीसित सम्भोग उचित छैन ।

[१] كُبِتُوا यो भूतकाल कर्मवाच्यको रुप हो, किन्तु यसबाट भविष्यमा हुने घटनाहरुलाई बताएर यो स्पष्ट गरियो कि यो हुनु यस्तै निश्चित छ जस्तो कि त्यो भैसकेछ, भयो पनि यस्तै कि बद्रका दिन यी मक्काका मूर्तिपूजक अपमानित गरिए, केही मारिए, केही बन्दी बनाइए तथा मुसलमान उनीमाथि प्रभुत्वशाली रहे । मुसलमानहरुको विजय पनि उनका लागि ठूलो अपमान थियो ।

[२] यसबाट अभिप्राय विगत समुदाय हो जुन यसै विरोधका कारण नाश भइहाल्यो ।

يَوْمَ يَبْعَثُهُمُ اللّٰهُ جَمِيعًا فَيُنَبِّئُهُم بِمَا عَمِلُوا ۚ أَحْصَاهُ اللّٰهُ وَنَسُوهُ ۚ وَاللّٰهُ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدٌ ﴿٦﴾

(६) जुन दिन अल्लाह (तआ़ला) ले ती सबैलाई उठाउनेछ, अनि उनीहरुलाई उनीद्वारा गरिएका कर्महरुसित अवगत गराउनेछ, (जसलाई) अल्लाहले गनेको छ तथा जसलाई यिनी बिर्सिहालेका थिए ।[1] तथा अल्लाह (तआ़ला) प्रत्येक वस्तुसित अवगत छ ।[2]

أَلَمْ تَرَ أَنَّ اللّٰهَ يَعْلَمُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۖ مَا يَكُونُ مِن نَّجْوَىٰ ثَلَاثَةٍ إِلَّا هُوَ رَابِعُهُمْ وَلَا خَمْسَةٍ إِلَّا هُوَ سَادِسُهُمْ وَلَا أَدْنَىٰ مِن ذَٰلِكَ وَلَا أَكْثَرَ إِلَّا هُوَ مَعَهُمْ أَيْنَ مَا كَانُوا ۖ ثُمَّ يُنَبِّئُهُم بِمَا عَمِلُوا يَوْمَ الْقِيَامَةِ ۚ إِنَّ اللّٰهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٧﴾

(७) के तिमीले देखेनौ कि अल्लाह आकाशहरु एवं धर्तीको प्रत्येक वस्तुसित अवगत छ । तीन व्यक्तिहरुको कानेखुसी हुँदैन, किन्तु अल्लाह उनको चौथो हुन्छ तथा न पाँचको किन्तु त्यो उनका छैठौं हुन्छ तथा न त्यसभन्दा कमको तथा न अधिकको किन्तु त्यो उनका साथ नै हुन्छ[3] जहाँपनि उनी होऊन्[4] अनि केयामत (प्रलय) का दिन उनीहरुलाई उनका कर्महरुसित सूचित गराइनेछ,[5] निःसन्देह अल्लाह (तआ़ला) प्रत्येक वस्तुको जानकार छ ।

[1]यो मनोगत संदेहहरुको उत्तर हो कि पापहरुको यति अधिकता तथा यति रुप छन् कि उनको गणना प्रत्यक्ष रुपले असम्भव छ । अल्लाह तआ़ला भन्नुहुन्छ कि तिम्रा लागि वस्तुत: असम्भव छ बरु तिमीलाई त आफूद्वारा गरिएका सबै कर्म पनि याद हुनेछैन, परन्तु यो अल्लाहका लागि कुनै कठिन छैन, उसले एक-एकको कर्म सुरक्षित गरेको छ ।

[2]त्यसबाट कुनै कुरा लुकेको छैन । अगाडी यस कुरामा अधिक जोड दिइएको छ कि त्यो प्रत्येक कुरोलाई जान्दछ ।

[3]उपरोक्त संख्याको विशेषरुपले चर्चाको अर्थ यो होइन कि उनी यसभन्दा कम अथवा अधिक संख्याका बीच हुने वार्तासित अन्जान रहन्छ, अपितु यो संख्या उदाहरणस्वरुप हो । उद्देश्य यो भन्नु हो कि संख्या कम होस् वा अधिक । त्यो आफ्ना गुणद्वारा प्रत्येकका साथ छ तथा प्रत्येक खुला तथा गुप्त कुरालाई जान्दछ ।

[4]एकान्तमा होऊन् अथवा मानिसहरुका बीच नगरहरुमा होऊन् अथवा वनहरुमा आवादीहरुमा होऊन् अथवा निर्जन पर्वत, वन तथा गुफाहरुमा, जहाँपनि होऊन् त्यसबाट लुकेको अवस्थामा रहन सक्दैनन् ।

[5]अर्थात् तदानुसार प्रत्येकलाई प्रतिकार दिइनेछ, सदाचारीहरुलाई त्यसका सदाचार को पुण्य तथा नराम्रोलाई त्यसका दुष्कर्महरुको दण्ड ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ نُهُوا عَنِ النَّجْوَىٰ ثُمَّ يَعُودُونَ لِمَا نُهُوا عَنْهُ وَيَتَنَاجَوْنَ بِالْإِثْمِ وَالْعُدْوَانِ وَمَعْصِيَتِ الرَّسُولِ وَإِذَا جَاءُوكَ حَيَّوْكَ بِمَا لَمْ يُحَيِّكَ بِهِ اللَّهُ وَيَقُولُونَ فِي أَنفُسِهِمْ لَوْلَا يُعَذِّبُنَا اللَّهُ بِمَا نَقُولُ ۚ حَسْبُهُمْ جَهَنَّمُ يَصْلَوْنَهَا ۖ فَبِئْسَ الْمَصِيرُ ⑧

(८) के तिमीले ती मानिसलाई देखेनौ जसलाई कानेखुसीबाट रोकिदिएको थियो ? उनीहरु तैपनि त्यस निषेध गरिएको कार्यलाई पुन: गर्दैछन्[1] तथा आपसमा पापको तथा अन्यायको एउटा सन्देष्टाको अवज्ञाको कानेखुसी गर्दछन्,[2] तथा जब तिम्रो पासमा आउँछन् त मलाई ती शब्दहरुमा सलाम गर्दछन्, जुन शब्दमा अल्लाह (तआ़ला) ले भनेन[3] तथा आफ्ना हृदयमा भन्दछन् कि अल्लाह (तआ़ला) ले हामीलाई हाम्रो यस भनाईमा दण्ड किन दिँदैन ?[4]

[1]यसबाट मदीनामा यहूदी तथा मुनाफ़िक अभिप्राय हुन् । जब मुसलमान उनका छेउबाट गुज्रन्छन् त यिनी परस्पर टाउको जोडेर यस्ता कानेखुसी गर्दछन् कि मुसलमान ठान्दछन् कि सम्भवत: उनका विरुद्ध कुनै षड्यन्त्र रचिराखेका छन्, अथवा मुसलमानहरुको कुनै सेनामाथि आक्रमण गरेर शत्रुले क्षति पुऱ्याएको छ, जसको सुचना उनीहरुलाई प्राप्त भएको छ । मुसलमान यी कुराहरुबाट भयभीत हुनजान्थे । यसकारण नबी सल्लल्लाहु अलैहि व सल्लमले यसप्रकारका कानेखुसीबाट रोकिदिनुभयो । परन्तु केही समय पश्चात उनीहरुले फेरि यो निन्दित क्रम आरम्भ गरिदिए । आयतमा उनका यसै आचरणको चर्चा गरिंदैछ ।

[2]अर्थात् उनका यी कानेखुसी पुण्य तथा संयमका कुरामा हुँदैन बरु पाप, अत्याचार एवं रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमको अवज्ञामा आधारित हुन्छ, जस्तै ग़ीबत (पिशुनता) आक्षेप लगाउनु, अपशब्द परस्पर रसूलको अवज्ञामा उत्तेजना आदि ।

[3]अर्थात् अल्लाहले त सलामको तरीका यो भन्नुभयो कि तिमी السَّلَامُ عَلَيْكُمْ وَرَحْمَةُ اللهِ भन, परन्तु यी यहूदी नबी सल्लल्लाहु अलैहि व सल्लमको सेवामा उपस्थित हुन्थे त त्यसको साटो भन्थे اَلسَّامُ عَلَيْكُمْ (तिमीलाई मृत्यु होस्) । यसकारण रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम उनका उत्तरमा केवल यो भन्थे عَلَيْكُمْ अथवा عَلَيْكَ तथा तिमीमाथि नै होस्), तथा उहाँले मुसलमानहरुलाई पनि जोड दिएर भन्नुभयो कि जब कोही यहूदी-इसाई सलाम गर्दछ त उत्तरमा عَلَيْكَ भन्ने गर अर्थात् عَلَيْكَ مَا قُلْتَ (तिमीले जे भन्यौ त्यो तिमीमाथि नै परोस्) (सहीह बुख़ारी तथा मुस्लिम, किताबुल अदब, बाब लम यकुनिन्नबीयो सल्लल्लाहु अलैहि व सल्लम फ़ाहिशन् वला मुतफहिहशन)

[4]अर्थात् तिनी परस्पर अथवा आफ्ना मनमा भन्थे कि यदि त्यो सच्चा नबी भएको भए अल्लाहले अवश्य हाम्रो दुष्कर्मका लागि हाम्रो पकड गर्दथ्यो ।

उनका लागि नरक् पर्याप्त (दण्ड) छ, जसमा तिनी जानेछन्[1] त त्यो कति नराम्रो वासस्थान हो ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓاْ إِذَا تَنَٰجَيۡتُمۡ فَلَا تَتَنَٰجَوۡاْ بِٱلۡإِثۡمِ وَٱلۡعُدۡوَٰنِ وَمَعۡصِيَتِ ٱلرَّسُولِ وَتَنَٰجَوۡاْ بِٱلۡبِرِّ وَٱلتَّقۡوَىٰۖ وَٱتَّقُواْ ٱللَّهَ ٱلَّذِيٓ إِلَيۡهِ تُحۡشَرُونَ ٩

(९) हे ईमान भएकाहरु ! तिमी जब कानेखुसी गर्दछौ त यो कानेखुसी पाप, उद्दण्डता एवं रसूलको अवज्ञाको नहोस्,[2] बरु हीत एवं सदाचारका कुराहरुमा कानेखुसी गर,[3] तथा त्यस अल्लाहसित तर्सिरह जसका पास तिमी सबै एकत्र गरिनेछौ ।

إِنَّمَا ٱلنَّجۡوَىٰ مِنَ ٱلشَّيۡطَٰنِ لِيَحۡزُنَ ٱلَّذِينَ ءَامَنُواْ وَلَيۡسَ بِضَآرِّهِمۡ شَيۡـًٔا إِلَّا بِإِذۡنِ ٱللَّهِۚ وَعَلَى ٱللَّهِ فَلۡيَتَوَكَّلِ ٱلۡمُؤۡمِنُونَ ١٠

(१०) (नराम्रो) कानेखुसी शैतानको कार्य हो, जसबाट ईमान भएकाहरुलाई दुख होस्,[4] यद्यपि अल्लाह तआलाको इच्छा बिना त्यसले उनलाई कुनै हानि पुऱ्याउन सक्दैन । तथा ईमानवालाहरुलाई आवश्यक छ कि अल्लाहमाथि नै भरोसा राखून् ।[5]

---

[1]अल्लाहले भन्नुभयो कि यदि अल्लाहले आफ्नो इच्छा तथा हिक्मतका कारण संसारमा तुरुन्त पकड गरेन त के त्यो परलोकमा पनि नरक्को यातनाबाट बच्नेछन् ? होइन, निश्चय नै, नरक् उनको प्रतिक्षामा छ जसमा उनी प्रवेश गर्नेछन् ।

[2]जस्तै यहूद तथा मुनाफ़िकहरुको आचरण छ। यो मानौं मुसलमानहरुको शिक्षा एवं आचरण निर्माणका लागि भनिंदैछ, कि यदि तिमी आफ्ना ईमानका दावामा साँचो छौ भने तिम्रा कानेखुसीहरु यहूद तथा मुनाफ़िकहरुको जस्तो पाप तथा उद्दण्डतामा हुनुहुँदैन ।

[3]अर्थात् जसमा भलाई नै भलाई छ तथा जो अल्लाह एवं रसूल सल्लल्लाहु अलैहि व सल्लमका आज्ञापालनमा आधारित हुन्छ किनकि यही पुण्य कर्म तथा सदाचार हो।

[4]पाप, अवज्ञा तथा रसूल सल्लल्लाहु अलैहि व सल्लमको अवहेलनामा आधारित कानेखुसीहरु शैतानी कार्य हुन्, किनकि शैतानले नै यसका लागि प्रेरित गर्दछ ताकि त्यसले यसकाद्वारा मोमिनहरुलाई दुखी तथा शोकग्रस्त गरिदेओस् ।

[5]किन्तु यी कानेखुसी तथा शैतानी गतिविधिहरु मोमिनहरुलाई कुनै क्षति पुऱ्याउन सक्दैनन्, किन्तु यो कि अल्लाहको इच्छा होस् । यसकारण तिमी आफ्ना शत्रुका तुच्छ गतिविधिहरुबाट व्याकुल नहुनेगर । बरु अल्लाहमाथि भरोसा गर । यसकारण कि सबै विषयहरुको अधिकार उसैका हातमा छ तथा त्यही प्रत्येक वस्तुमाथि सामर्थ्यवान् छ, न कि यहूद एवं मुनाफिक जो तिमीलाई नाश

(११) हे ईमान भएकाहरु ! जब तिमीसित भनिन्छ कि सभाहरुमा अलि खुला रुपमा बस, त तिमी स्थान विस्तृत गरिदेउ[1] अल्लाह (तआला) तिमीलाई विस्तार प्रदान गर्नेछ,[2] तथा जब भनिन्छ कि उभिहाल,[3] त तिमी उभिहाल, अल्लाह (तआला) तिमीसित ती मानिसहरुका जो ईमान स्वीकार गरेका छन् तथा जो ज्ञान

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِذَا قِيلَ لَكُمْ تَفَسَّحُوا۟ فِى ٱلْمَجَٰلِسِ فَٱفْسَحُوا۟ يَفْسَحِ ٱللَّهُ لَكُمْ ۖ وَإِذَا قِيلَ ٱنشُزُوا۟ فَٱنشُزُوا۟ يَرْفَعِ ٱللَّهُ ٱلَّذِينَ ءَامَنُوا۟ مِنكُمْ وَٱلَّذِينَ أُوتُوا۟ ٱلْعِلْمَ دَرَجَٰتٍ ۚ وَٱللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ⑪

गर्न चाहन्छन् । एकान्तका कुराका विषयमा नै मुसलमानहरुलाई एउटा नैतिक निर्देश दिइएको छ कि जब तिमी तीन व्यक्ति एकत्र रह त उनमा एकलाई छाडेर दुई आपसमा कानेखुसी नगरुन्, किनकि यो तरीकाले त्यस एउटा व्यक्तिलाई दुखी गरिदिनेछ । (सहीह बुख़ारी, किताबुल इस्तीज़ान, मुस्लिम, किताबुस् सलाम) हो, त्यसको अनुमति एवं प्रसन्नताले यस्तो गर्नु वैध (जायज़) छ, किनकि यस दशामा दुई व्यक्तिहरुबाट कानेखुसी गर्नु कसैका लागि व्याकूलताको कारण हुनेछैन ।

[1]यसमा मुसलमानहरुलाई सभाका शिष्टाचार भनिदैछन् । मज़लिस शब्द सामान्य हो, जो प्रत्येक त्यस मज़लिसमा सम्मिलित छ जसमा मुसलमान भलाई तथा पुण्यको प्राप्तिका लागि एकत्रित हुन्छन्, शिक्षा-दीक्षाका लागि मज़लिस होस् वा शुक्रवारका लागि होस् । (तफ्सीर अल कुर्तबी) "खुला रुपमा बस" को अभिप्राय हो कि सभाको परिधि विस्तृत राख ताकि पछि आउनेवालाहरुका लागि पनि स्थान होस् । परिधि तंग नराख कि जो पछि आउँछ उभिरहोस् अथवा अरुलाई हटाएर आफ्नो स्थान बनाओस् । यी दुवै कुरा असभ्य छन् । जस्तो कि नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि कुनै व्यक्ति अर्कोलाई हटाएर त्यस स्थानमा नबसोस् । अतः मज़लिसको दायरा विस्तृत गरिहाल । (सहीह बुख़ारी, किताबुल जुमुअः, मुस्लिम, किताबुस सलाम)

[2]अर्थात् यसका प्रतिफल स्वरुप अल्लाहले तिमीलाई स्वर्गमा विस्तार तथा फैलाव प्रदान गर्नेछ अथवा जहाँपनि तिमी विस्तार एवं फैलाव चाहनेछौ, जस्तै घरमा, जीविकामा, कब्र (चिहानमा) प्रत्येक ठाउँमा विस्तार प्रदान गर्नेछ ।

[3]अर्थात् जिहादका लागि नमाज़का लागि अथवा कुनै पनि राम्रो कामका लागि अथवा अभिप्राय यो हो कि जब मज़लिसबाट उठेर जानलाई भनिन्छ कि त तुरुन्त गइहाल । मुसलमानहरुलाई यो आदेश यसकारण दिइयो कि सहाबाले किराम रज़ी अल्लाहु अन्हुम नबी सल्लल्लाहु अलैहि व सल्लमको मजलिसबाट उठेर जान चाहनु हुन्नथ्यो, किन्तु यस्तो कहिले उनीहरुलाई दुख हुन्थ्यो जो उहाँ सल्लल्लाहु अलैहि व सल्लमसित एकान्तमा कुरा गर्न चाहन्थे ।

दिएका छन् पद उच्च गरिदिनेछ ।[1] तथा अल्लाह (तआला) (प्रत्येक त्यस कार्यबाट) जो तिमी गरिराखेका छौ (राम्ररी) परिचित छ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِذَا نَٰجَيْتُمُ ٱلرَّسُولَ فَقَدِّمُوا۟ بَيْنَ يَدَىْ نَجْوَىٰكُمْ صَدَقَةً ۚ ذَٰلِكَ خَيْرٌ لَّكُمْ وَأَطْهَرُ ۚ فَإِن لَّمْ تَجِدُوا۟ فَإِنَّ ٱللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿١٢﴾

(१२) हे मुसलमानहरु ! जब तिमी रसूलसित एकान्तमा कुरा गर्न चाहन्छौ, त आफ्नो यस एकान्तमा कुरा गर्नुभन्दा पूर्व केही दान दिने गर,[2] यो तिम्रा पक्षमा उत्तम तथा पवित्रतम् छ,[3] हो, यदि पाउँदैनौ भने निःसन्देह अल्लाह (तआला) क्षमाशील दयालु छ ।

ءَأَشْفَقْتُمْ أَن تُقَدِّمُوا۟ بَيْنَ يَدَىْ نَجْوَىٰكُمْ صَدَقَٰتٍ ۚ فَإِذْ لَمْ تَفْعَلُوا۟ وَتَابَ ٱللَّهُ عَلَيْكُمْ فَأَقِيمُوا۟ ٱلصَّلَوٰةَ وَءَاتُوا۟ ٱلزَّكَوٰةَ وَأَطِيعُوا۟ ٱللَّهَ وَرَسُولَهُۥ ۚ وَٱللَّهُ خَبِيرٌۢ

(१३) के तिमी आफ्नो एकान्तका कुराहरु (कानेखुसी) भन्दा पूर्व दान गर्नुबाट तर्सिहाल्यो ? त जब तिमीले यो गरेनौ तथा अल्लाह (तआला) ले पनि तिमीलाई क्षमा गरिदियो[4] त अब (उचित रुपमा) नमाज़हरुलाई स्थापित राख, ज़कात दिँदैरह तथा अल्लाह (तआला)

[1]अर्थात् ईमान भएकाहरुको दर्जा ईमान नभएकाहरुमाथि तथा ज्ञानीहरुका दर्जा अज्ञानीहरुमाथि उच्च गर्नेछ । जसको अभिप्राय यो भयो कि ईमानका साथ धार्मिक ज्ञानको जानकारी पदको अधिक उच्चताको कारण हो ।

[2]प्रत्येक मुसलमान नबी सल्लल्लाहु अलैहि वसल्लमसित गुप्त कुराहरुको तथा एकान्तमा कुरा गर्नुको इच्छा राख्दथ्यो, जसबाट नबी सल्लल्लाहु अलैहि व सल्लमलाई वडो दुख हुन्थ्यो । केही धर्मविद् भन्दछन् कि मुनाफ़िक यसै अकारण नबी सल्लल्लाहु अलैहि व सल्लमसित कानेखुसी गर्दथे, जसबाट मुसलमानहरुलाई दुख हुन्थ्यो यसकारण अल्लाहले यो आदेश उतार्‍यो ताकि उहाँसित कुराकानी गर्नुको साधारण भावनालाई रोकियोस् ।

[3]उत्तम यसकारण कि दानबाट तिम्रा अरु दरिद्र मुसलमान भाइहरुलाई लाभ पुग्नेछ तथा पवित्र यसकारण छ कि यो एउटा पुण्यको कर्म तथा अल्लाहका आदेशको पालना हो, जसबाट मानवका मनहरुको शुद्धि हुन्छ । यसबाट यो पनि ज्ञात भयो कि यो आदेश औचित्यका लागि थियो, अनिवार्य होइन ।

[4]यो आदेश यद्यपि राम्रोपनाका लागि थियो, तैपनि मुसलमानहरुका लागि भारी थियो । अतः अल्लाहले शीघ्र नै निरस्त गरिदियो ।

بِمَا تَعْمَلُونَ ۝١٣

को तथा त्यसका सन्देष्टाको आज्ञाको पालना गर्दैरह ।[1] अनि तिमी जे-जति पनि गर्दैरहन्छौ ती सबैसित अल्लाह (राम्ररी) परिचित छ ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ تَوَلَّوْا قَوْمًا غَضِبَ اللَّهُ عَلَيْهِم مَّا هُم مِّنكُمْ وَلَا مِنْهُمْ وَيَحْلِفُونَ عَلَى الْكَذِبِ وَهُمْ يَعْلَمُونَ ۝١٤

(१४) के तिमीले ती मानिसहरुलाई देखेनौ जसले त्यस समुदायसित मित्रता गरे जसमाथि अल्लाह क्रोधित भइसकेको छ ।[2] न यी (भ्रष्टाचारी) तिम्रा नै हुन्, न उनका हुन् ।[3] तथा ज्ञान हुनुका उपरान्त पनि झूठमाथि सौगन्ध खाइराखेका छन् ।[4]

أَعَدَّ اللَّهُ لَهُمْ عَذَابًا شَدِيدًا ۖ إِنَّهُمْ سَاءَ مَا كَانُوا يَعْمَلُونَ ۝١٥

(१५) अल्लाह (तआला) ले उनका लागि कठोर यातना तयार गरेको छ ।[5] निश्चित रुपमा जे-जति यिनी गरिराखेका छन् नराम्रो गरिराखेका छन् ।

اتَّخَذُوا أَيْمَانَهُمْ جُنَّةً فَصَدُّوا عَن سَبِيلِ اللَّهِ فَلَهُمْ

(१६) यी मानिसहरुले त आफ्ना सौगन्धहरुलाई ढाल बनाएका छन्[6] तथा मानिसहरुलाई अल्लाहका

[1]अर्थात् अनिवार्य कर्तव्य तथा आदर्शहरुको निरन्तर पालना त्यस दानको साटो बन्न जानेछ, जसलाई अल्लाहले तिम्रा कठिनाईका लागि क्षमा गरिदिएको छ ।

[2]जसमाथि अल्लाहको क्रोध उतर्‍यो, उनी पवित्र कुर्‌आनको व्याख्या अनुसार यहूद हुन् तथा उनीसित मित्रता गर्नेहरु मुनाफ़िक मानिस हुन् । यी आयतहरु त्यस समय उतरे जब मदीनामा मुनाफ़िकहरुको प्रभाव थियो तथा यहूदीहरुको षड्यन्त्र पनि उन्नतिमा थियो । अहिले यहूदीहरुलाई देश निकाला दिइएको थिएन ।

[3]अर्थात् यी मुनाफ़िक (द्वयवादी) न मुसलमान हुन्, न धर्मका अनुसार यहूदी नै हुन् । अनि यिनी किन यहूदीहरुसित मित्रता गर्दछन् ? मात्र यसकारण कि यिनका तथा यहूदका बीच नबी सल्लल्लाहु अलैहि वसल्लम तथा इस्लामको शत्रुताको भाव समान छ ।

[4]अर्थात् सौगन्ध खाएर मुसलमानहरुलाई विश्वास दिलाउँछन् कि हामी पनि तिमी जस्तै मुसलमान हौं अथवा यहूदीहरुसित हाम्रा सम्बन्ध छैनन् ।

[5]अर्थात् यहूदीहरुसित मैत्री सम्बन्ध राख्नु तथा मिथ्या सौगन्धहरु खानुका कारण ।

[6]أَيْمَانٌ (ऐमान) يَمِينٌ (यमीन) को बहुवचन हो, अर्थ छ सौगन्ध । अर्थात् जस्तै ढालबाट शत्रुका आक्रमणलाई रोकेर आफ्नो बचाउ गरिन्छ, यसैप्रकार उनीहरुले आफ्ना सौगन्धहरुलाई मुसलमानहरुका तलवारबाट बच्नका लागि ढाल बनाएका छन् ।

عَذَابٌ مُّهِينٌ ﴿١٦﴾

मार्गबाट रोक्दछन्,[1] त उनका लागि अपमानकारी यातना छ ।

لَنْ تُغْنِيَ عَنْهُمْ أَمْوَالُهُمْ وَلَا أَوْلَادُهُمْ مِّنَ اللَّهِ شَيْئًا ۚ أُولَٰئِكَ أَصْحَابُ النَّارِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿١٧﴾

(१७) उनको धन एवं उनको सन्तान अल्लाहका समक्ष कुनै काम आउने छैन । यी त नरकमा जानेहरु हुन्, सधैं त्यसमा रहनेछन् ।

يَوْمَ يَبْعَثُهُمُ اللَّهُ جَمِيعًا فَيَحْلِفُونَ لَهُ كَمَا يَحْلِفُونَ لَكُمْ ۖ وَيَحْسَبُونَ أَنَّهُمْ عَلَىٰ شَيْءٍ ۚ أَلَا إِنَّهُمْ هُمُ الْكَاذِبُونَ ﴿١٨﴾

(१८) जुन दिन अल्लाह (तआ़ला) ती सबैलाई उठाई उभ्याउनेछ त यिनी जुनप्रकार तिम्रा समक्ष सौगन्ध खानेछन्, अल्लाह (तआ़ला) का समक्ष पनि सौगन्ध खान थाल्नेछन्[2] तथा ठान्नेछन् कि उनी पनि कुनै (तर्क) मा छन्,[3] विश्वास गर कि निःसन्देह उनी झूठा छन् ।

اسْتَحْوَذَ عَلَيْهِمُ الشَّيْطَانُ فَأَنْسَاهُمْ ذِكْرَ اللَّهِ ۚ أُولَٰئِكَ حِزْبُ الشَّيْطَانِ ۚ أَلَا إِنَّ حِزْبَ الشَّيْطَانِ هُمُ الْخَاسِرُونَ ﴿١٩﴾

(१९) उनीमाथि शैतानले प्रभाव प्राप्त गरेको छ[4] तथा उनीहरुलाई अल्लाहको याद बिर्साइदिएको छ,[5] यिनीहरु शैतानका समूह हुन् । सुन ! शैतानका समूह नै हानि बेहोर्ने छन् ।[6]

[1]अर्थात् मिथ्या सौगन्धहरु खाएर यिनी स्वयंलाई मुसलमान देखाउँछन्, जसका कारण धेरै मानिसलाई उनका सम्बन्धमा वास्तविकताको ज्ञान हुँदैन तथा उनी धोकामा आएर इस्लाम धर्म स्वीकार गर्नबाट बञ्चित रहन्छन् । यसप्रकार यिनी अल्लाहका मार्गबाट मानिसहरुलाई रोक्नुको अपराध पनि गर्दछन् ।

[2]अर्थात् उनका दूर्भाग्य तथा कठोर हृदय हुनुको चरम सीमा हो कि क़ेयामतका दिन जहाँ कुनै कुरा गुप्त रहने छैन, त्यहाँ पनि यिनी अल्लाहका अगाडी मिथ्या सौगन्धहरु खाने दुस्साहस गर्नेछैन ।

[4]اسْتَحْوَذَ को अर्थ 'घेरिहाल्यो' 'एकत्र गरिहाल्यो' हो । यसकारण त्यसको अनुवाद 'प्रभुत्व प्राप्त गरिहाल्यो' गरिन्छ, किनकि प्रभुत्वमा यी सबै भावार्थ आउँछन् ।

[5]अर्थात् उसले जुन कुराहरुलाई गर्न आदेश दिएको छ उनीबाट शैतानले उनलाई विमुख गरिदिएको छ तथा जुन कुराहरुबाट उनीहरुलाई मना गरेको छ तिनलाई उनीबाट गराउँछ, उनीहरुलाई सुन्दर देखाएर अथवा भ्रममा पारेर अथवा कामना एवं अभिलाषहरुमा फँसाएर ।

[6]अर्थात पूर्ण घाटा उनैका मार्गमा आउनेछ । मानौं अरु उनका सापेक्ष घाटामा नै

إِنَّ الَّذِينَ يُحَادُّونَ اللَّهَ وَرَسُولَهُ أُولَٰئِكَ فِي الْأَذَلِّينَ ⑳

(२०) नि:सन्देह अल्लाह (तआ़ला) को तथा त्यसका सन्देष्टाको जो मानिस विरोध गर्दछन्[1] तिनै मानिस सर्वाधिक अपमानितहरुमा छन् ।[2]

كَتَبَ اللَّهُ لَأَغْلِبَنَّ أَنَا وَرُسُلِي ۚ إِنَّ اللَّهَ قَوِيٌّ عَزِيزٌ ㉑

(२१) अल्लाह (तआ़ला) लेखिसकेको छ कि नि:सन्देह म तथा मेरा सन्देष्टा प्रभावशाली (विजयी) रहनेछन् । नि:सन्देह अल्लाह तआ़ला शक्तिशाली एवं प्रभावशाली छ ।[4]

لَا تَجِدُ قَوْمًا يُؤْمِنُونَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ يُوَادُّونَ مَنْ حَادَّ اللَّهَ وَرَسُولَهُ وَلَوْ كَانُوا آبَاءَهُمْ أَوْ أَبْنَاءَهُمْ

(२२) अल्लाह (तआ़ला) माथि तथा केयामत (प्रलय) अगाडीका दिनमाथि ईमान स्वीकार गर्नेहरुलाई तपाईं अल्लाह तथा त्यसका सन्देष्टाका विरोधीहरुसित प्रेम गरेको कदापि पाउनु हुनेछैन,[5] चाहे उनीहरु

छैनन्, यसकारण कि उनीहरुले स्वर्गको सौदा मार्ग-विचलनसित गरिहाले, अल्लाहमाथि झूठा बोल्यो तथा लोक-परलोकमा मिथ्या सौगन्धहरु खाँदै रहे ।

[1] مُحَادَّة (मुहाद्द:) यस्ता कडा विरोध, शत्रुता तथा झगडालाई भन्दछन् कि दुबै पक्षहरुको अति मुश्किल हुन्छ। मानौं दुबै दुई किनारा (सीमा) मा छन् जो परस्पर प्रतिकूल छन् । यसैबाट यो 'रोकिनु' का अर्थमा प्रयोग हुन्छन् तथा यसैकारण द्वारपाल तथा पहरेदारलाई पनि 'हद्दाद' भनिन्छ ।

[2] जस्तो विगत जातिहरुमध्ये अल्लाह तथा रसूल सल्लल्लाहु अलैहि व सल्लमका विरोधीहरुलाई अपमानित विध्वंस्त गरियो, यिनको गणना पनि तिनै अपमानितहरुमा हुनेछ । तथा उनका भागमा लोक तथा परलोकको विफलता एवं अपमानका अतिरिक्त केही हात लाग्ने छैन ।

[3] अर्थात् भाग्य तथा लौहे महफ़ूज (सुरक्षित पुस्तक) मा जसमा कुनै परिवर्तन हुनसक्दैन । यो विषय सूर: मोमिन ५१, ५२ मा पनि वर्णन गरिएको छ ।

[4] जब यस कुराको लेखक सबैमाथि प्रभुत्वशाली एवं अति शक्तिमान छ त त्यस पश्चात दोस्रो को छ जसले यो निर्णयलाई बदल्न सक्छ ? अर्थ यो हो कि यो निर्णय अटल भाग्य तथा पक्का आदेश हो ।

[5] यस आयतमा अल्लाह तआ़लाले स्पष्ट गरेको छ कि जो अल्लाहप्रति आस्था तथा परलोकप्रति विश्वासमा पूर्ण हुन्छन्, उनीहरु अल्लाह तथा रसूल सल्लल्लाहु अलैहि व सल्लमका शत्रुहरुसित प्रेम तथा हार्दिक लगाव राख्दैनन् । मानौं ईमान तथा अल्लाह

أَوْ إِخْوَانَهُمْ أَوْ عَشِيرَتَهُمْ ۚ أُولَٰئِكَ كَتَبَ فِي قُلُوبِهِمُ الْإِيمَانَ وَأَيَّدَهُم بِرُوحٍ مِّنْهُ ۖ وَيُدْخِلُهُمْ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا ۚ رَضِيَ اللَّهُ عَنْهُمْ وَرَضُوا عَنْهُ ۚ أُولَٰئِكَ حِزْبُ اللَّهِ ۚ أَلَا إِنَّ حِزْبَ اللَّهِ هُمُ الْمُفْلِحُونَ ﴿٢٢﴾

उनका पिता तथा उनका पुत्र अथवा उनका भाई अथवा उनका (परिवारका निकट) सम्बन्धि नै किन नहोऊन् ।[१] यिनै मानिस हुन् जसका हृदयमा अल्लाह (तआलाले) ईमान लेखिदिएको छ[२] तथा जसको पुष्टि आफ्नो आत्माले गरेको छ[३] तथा जसलाई ती स्वर्गहरुमा प्रवेश दिइनेछ जसका मुनि (शीतल) जलका सरिताहरु प्रवाहित छन्, जहाँ यिनी सधैं रहनेछन्, अल्लाह उनीसित प्रसन्न छ तथा यिनी अल्लाहसित प्रसन्न छन्,[४] यिनीहरु अल्लाहका

एवं रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमका शत्रुहरुसित प्रेम तथा समर्थन एक हृदयमा एकत्रित हुन सक्दैनन् । यो विषय पवित्र कुरआनका अन्य पनि कैयन् स्थानहरुमा वर्णन गरिएको छ, जस्तै आले-इमरान-२८, सूर: तौबा-२४, आदि ।

[१]यसकारण कि उनको ईमान उनलाई उनका प्रेमबाट रोक्दछ तथा ईमानको पक्षसित पिता, पुत्र, भाइ तथा वंश एवं परिवारका प्रेम अरु पक्षभन्दा अधिक आवश्यक हुन्छ, जस्तो कि सहाबये केराम रज़ियल्लाहु अन्हुले यो गरेर देखाए । एक जना मुसलमान सहाबीले आफ्ना पिता, आफ्ना पुत्र, आफ्ना भाइ, आफ्ना काका तथा मामा एवं अन्य सम्बन्धिहरुलाई हत गर्नुमा संकोच गरेनन् यदि उनी कुफ्रका समर्थनमा काफ़िरहरुका साथ लड्नेहरुमा सम्मिलित हुन्थे । सीरत तथा इतिहासका किताबहरुमा यो उदाहरण अंकित छ । यस प्रकरणमा बद्रका रणको यो घटना स्मरणीय छ जब बद्रका बन्दीहरुका विषयमा परामर्श भयो कि उनीसित अर्थदण्ड लिएर मुक्त गरिदिइयोस् अथवा हत गरिदिइयोस्, त आदरणीय उमर रज़ीयल्लाहु अन्हुले यो विचार व्यक्त गर्नुभएको थियो कि प्रत्येक बन्दीलाई त्यसका सम्बन्धिलाई दिइयोस् जसलाई त्यसले स्वयं आफ्ना हातहरुले वध गरोस् । तथा अल्लाहलाई उमरको यही विचार पसन्द आयो (विवरणका लागि हेर्नुस् सूर अंफाल-६७ को व्याख्या)

[२]अर्थात् पक्का एवं दृढ गरिदिएको छ ।

[३]आत्मासित अभिप्राय आफ्नो विशेष सहायता अथवा ईमानको प्रकाश हो जो उनलाई उनका उपरोक्त गुणहरुका कारण प्राप्त भयो ।

[४]अर्थात् जब प्रथम मुसलमान सहाबये किराम ईमानका आधारमा आफ्ना सम्बन्धिहरु तथा समीपवर्तीहरुका लागि खिन्न भइहाल्यो । यहाँसम्मकि उनीहरुलाई आफ्ना हातहरुले हत गर्नुमा पनि संकोच गरेनन् त त्यसका प्रतिफल अल्लाहले उनलाई आफ्नो प्रसन्नता प्रदान गरिदिए तथा उनीमाथि त्यसप्रकार आफ्ना अनुग्रहको वर्षा गऱ्यो कि उनी अल्लाहसित प्रसन्न भइहाले । अत: आयतमा

समूह छन्, जानीहाल कि नि:सन्देह अल्लाहका समूह नै सफल मानिस हुन् ।[1]

سُوْرَةُ الْحَشْرِ

## सूरतुल हश्र-५९

सूर: हश्र* मदीनामा अवतरित भएको, यसमा चौबीस आयतहरु तथा तीन रूकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

سَبَّحَ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْأَرْضِ ۚ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ①

(१) आकाशहरु तथा धर्तीको प्रत्येक वस्तु अल्लाह तआलाको पवित्रताको वर्णन गर्दछ, तथा त्यो प्रभावशाली हिक्मतवाला छ ।

هُوَ الَّذِيْٓ اَخْرَجَ الَّذِيْنَ كَفَرُوْا مِنْ

(२) त्यही हो जसले अहले किताबहरु मध्येबाट काफिरहरुलाई

[1]वर्णित सम्मान رضی الله عنهم و رضوا عنه यद्यपि विशेष रुपले सहाबाका बारेमा अवतरित भएको छैन, तैपनि उनी यसको प्रथम चरितार्थ तथा पूर्ण चरितार्थ हुन् । यसैकारण यसका शाब्दिक अर्थलाई अगाडी राख्दै उपरोक्त गुणहरुले युक्त प्रत्येक मुसलमान رضي الله عنه को पात्र बन्नसक्छ, जस्तै शाब्दिक भावार्थका आधारमा प्रत्येक मुसलमानमाथि عليه الصلوٰة و السلام लाई (प्रार्थना वाक्यका रुपमा) भन्न सकिन्छ । परन्तु अहले सुन्नतले यिनका शाब्दिक अर्थबाट हटेर यिनलाई आदरणीय सहाबा तथा अम्बियाका अतिरिक्त कुनै अरुका लागि बोल्नु तथा लेख्नु उचित मानेका छैनन् । यो मानौं प्रतीक छ, رضي الله عنهم सहाबाका लागि तथा عليهم الصلوٰة والسلام अम्बियाए किरामका लागि । यो यस्तो नै छ, رحمة الله عليه जस्तो वा رحمه الله (अल्लाहको दया उसमाथि होस् अथवा अल्लाहले उसमाथि दया गरोस्) लाई शाब्दिक अर्थ अनुसार जीवित तथा मृत्यु दुबैका लागि बोल्न सकिन्छ, किनकि यो एउटा प्रार्थना वाक्य हो जसको आवश्यकता जीवित तथा मृत्यु दुबैलाई छ, किन्तु यिनको प्रयोग मृतकहरुका लागि विशेष भइसकेको छ । यसकारण यसलाई जीवितका लागि प्रयोग गरिंदैनन् ।

[1]अर्थात् मोमिनहरुको यही गिरोह सफल हुनेछ । अरुहरु उनका अपेक्षा यस्तो नै हुनेछन् जस्तो उनी सफलताबाट पूर्णत: बञ्चित छन्, जस्तो कि वस्तुत: परलोकमा उनी सफलताबाट बञ्चित हुनेछन् ।

*यो सूर: यहूदका एक क़बीला बनू नज़ीरका बारेमा अवतरित भएको छ । यसकारण यसलाई सूरतुनन्नज़ीर पनि भन्दछन् । (सहीह बुख़ारी, तफ़सीर सूरतिल हश्र)

أَهْلِ الْكِتٰبِ مِنْ دِيَارِهِمْ لِأَوَّلِ الْحَشْرِ ۚ مَا ظَنَنْتُمْ أَنْ يَّخْرُجُوْا وَظَنُّوْٓا أَنَّهُمْ مَّانِعَتُهُمْ حُصُوْنُهُمْ مِّنَ اللّٰهِ فَأَتٰىهُمُ اللّٰهُ مِنْ حَيْثُ لَمْ يَحْتَسِبُوْا ۖ وَقَذَفَ فِيْ قُلُوْبِهِمُ الرُّعْبَ يُخْرِبُوْنَ بُيُوْتَهُمْ بِأَيْدِيْهِمْ وَأَيْدِي الْمُؤْمِنِيْنَ ۖ فَاعْتَبِرُوْا يٰٓأُولِي الْأَبْصَارِ ﴿٢﴾

उनका घरहरुबाट प्रथम हश्र (जमाव) का समय निकाल्यो,[1] तिम्रो अनुमान (पनि) थिएन कि उनीहरु निस्कनेछन् तथा उनी स्वयं (पनि) ठानिराखेका थिए कि उनका (सुदृढ) दुर्ग उनलाई अल्लाह (का प्रकोप) बाट बचाउनेछन्,[2] त उनीमाथि अल्लाहको (प्रकोप) यस्तो स्थानबाट आइपऱ्यो कि उनीहरुलाई अनुमान पनि थिएन[3] तथा उनका हृदयहरुमा अल्लाह (तआला) ले भय पारिदियो,[4] उनी आफ्ना

[1]मदीनाका आसपास यहूदीहरुका तीन क़बीला आवाद थिए, बनू नज़ीर, बनू कुरैज़ा तथा बनू क़ैनुकाअ। मदीना आउनुका पश्चात नबी सल्लल्लाहु अलैहि व सल्लमले उनीसित सन्धि पनि गर्नुभएको थियो, परन्तु यिनीहरुले आन्तरिक रुपमा षड्यन्त्र गर्दैरहे तथा मक्काका काफ़िरहरुसित पनि मुसलमानहरुका विरूद्ध सम्पर्क राखे, यहाँसम्मकि एउटा अवसरमा जब उहाँ सल्लल्लाहु अलैहि व सल्लम उनका पास जानु भएको थियो। बनू नज़ीरले रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लममाथिबाट एउटा ठूलो पत्थर फ्याँकेर उहाँलाई मारिहाल्नुको योजना बनायो, जसबाट प्रकाशना (वह्य) द्वारा समयमा उहाँलाई सूचित गरिदियो तथा उहाँ सल्लल्लाहु अलैहि व सल्लम त्यहाँबाट फर्किहाल्नु भयो। उनका यस सन्धि भङ्गका कारण उहाँले उनीमाथि आक्रमण गर्नुभयो। यिनी केही दिन आफ्ना गढीहरुमा बन्द रहे। अन्ततः उनीहरुले प्राण क्षमाका रुपमा देश निकालालाई स्वीकार गरे, जसलाई रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमले मान्नु भयो। यसलाई अव्वले हश्र (पहिलोपटक जमाव) सित व्यञ्जित गरियो, किनकि उनको यो प्रथम देश निकाला थियो जो मदीनाबाट भयो। यहाँबाट यिनीहरु ख़ैबरमा गई आवाद भए। त्यहाँबाट आदरणीय उमरले उनीहरुलाई पुनः देश निकाला दिनुभयो तथा शाम (राज्य) तिर लखेटदिनु भयो, जहाँ भन्दछन् कि सबै मनुष्यहरुको अन्तिम जमाउ (एकत्र हुनु) हुनेछ।

[2]यसकारण कि उनीहरुले अति सदृढ गढ बनाएका थिए जसमाथि उनलाई गर्व थियो तथा मुसलमान पनि बुझ्दथे कि यति सरलताले यी गढी विजय हुन सक्ने छैन।

[3]तथा त्यो यही थियो कि रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमले उनीलाई घेरिहाल्नु भएको थियो जो उनका अनुमान तथा विचारमा पनि थिएन।

[4]यस भयका कारण नै उनी देश त्यागका लागि तयार भए, अन्यथा अब्दुल्लाह बिन उबैय (मुनाफ़िक़हरुका प्रमुख) तथा अन्य मानिसहरुले उनलाई सन्देश पठाएका थिए कि तिमी मुसलमानहरुका अगाडी नझुक्नु, हामी तिम्रा साथमा छौं। यसका अतिरिक्त, अल्लाहले नबी सल्लल्लाहु अलैहि व सल्लमलाई यो विशेष गुण प्रदान गर्नुभएको थियो कि शत्रु एक महिनाको दूरीमा उहाँ सल्लल्लाहु अलैहि व सल्लमसित भयभीत हुन जान्थ्यो। यसकारण उनीमाथि अत्यन्त भय तथा

घरहरुलाई आफ्नै हातहरुले उजाडिराखेका थिए[1] तथा मुसलमानहरुका हात (नष्ट गराइराखेका थिए)[2] त हे आँखा भएकाहरु ! शिक्षा ग्रहण गर ।[3]

(३) तथा यदि अल्लाह (तआला) ले उनका लागि देश निकाला नलेखिदिएको भए त निश्चित रुपमा उनलाई संसारमै यातना दिन्थ्यो,[4] परलोकमा (त) उनका लागि अग्निको यातना छ नै ।

وَلَوْلَآ أَن كَتَبَ ٱللَّهُ عَلَيْهِمُ ٱلْجَلَآءَ لَعَذَّبَهُمْ فِى ٱلدُّنْيَا ۖ وَلَهُمْ فِى ٱلْءَاخِرَةِ عَذَابُ ٱلنَّارِ ③

डर छाइहाल्यो तथा सबै संसाधनहरुका उपरान्त हथियार राखिदिए, तथा केवल यो शर्त मुसलमानहरुबाट मनवाए जति सामान उनी बोकेर लैजान सक्छन्, उनीहरुलाई लैजानुको अनुमति होस् । अत: यस अनुमतिका कारण उनीहरुले आफ्ना घरहरुका द्वार तथा शहतीरसम्म उखेलिहाले ताकि साथमा लैजाऊन् ।

[1]अर्थात् जब उनलाई विश्वास भइहाल्यो कि देशबाट निस्कनु अनिवार्य छ त उनीहरुले घेराउका बीच नै आफ्ना घरहरुलाई ध्वस्त गर्न आरम्भ गरिदिए ताकि त्यो मुसलमानहरुका लागि काम लाग्ने नरहोस् । अथवा यो अभिप्राय हो कि सामान लैजानुको अनुमतिको पूरा लाभ प्राप्त गर्नका लागि उनीहरु आ-आफ्ना ऊटहरुमाथि जति सामान बोकेर लैजान सक्थे, आफ्ना घर उजाडेर ती सामान उनीहरुले ऊटहरुमाथि बोकाइदिए ।

[2]बाहिरबाट मुसलमान उनका घरहरुलाई ध्वस्त गर्दैरहे ताकि उनलाई समात्न सहज होस्, अथवा यो अभिप्राय छ कि उनका उजाडिएका घरहरुबाट शेष सामान निकाल्नका लागि मुसलमानहरुलाई अधिक ध्वंसबाट काम गर्नुपऱ्यो ।

[3]कि कसरी अल्लाहले उनका हृदयमा मुसलमानहरुको भय पारिदियो जबकि उनी एउटा शक्तिशाली तथा संसाधनपूर्ण क़बीला थिए । किन्तु जब अल्लाहको तर्फबाट कार्यको अवसर समाप्त भयो तथा अल्लाहले आफ्नो पकडमा ल्याउनुको निर्णय गऱ्यो त त्यसपछि उनको शक्ति तथा साधन उनका काम आएनन् न अन्य सहायक तथा सहयोगीले उनको केही सहायता गर्न सक्यो ।

[4]अर्थात् अल्लाहका लेखमा यसैप्रकार उनको देश निकाला पहिलादेखि अंकित नभएको भए त उनलाई यस संसारमा घोर यातना दिइन्थ्यो, जस्तो कि उनका भाइ यहूदका एउटा अर्को क़बीला (क़ुरैश) लाई यस्तै यातनामा पारियो कि उनका युवकहरुलाई वध गरिदिइयो तथा अरुहरुलाई बन्दी बनाइयो तथा उनका माल मुसलमानहरुका लागि ग़नीमत (लडाईंमा प्राप्त भएका सामग्री) बनाइदिइयो ।

ذٰلِكَ بِاَنَّهُمْ شَآقُّوا اللّٰهَ وَ رَسُوْلَهٗ ۚ وَمَنْ يُّشَآقِّ اللّٰهَ فَاِنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ④

(४) यो यसकारण कि उनीहरुले अल्लाह (तआला) त्यसका सन्देष्टाको विरोध गरे, तथा जसले पनि अल्लाहको विरोध गर्नेछ त अल्लाह (तआला) पनि कठोर यातना दिनेवाला छ ।

مَا قَطَعْتُمْ مِّنْ لِّيْنَةٍ اَوْ تَرَكْتُمُوْهَا قَآئِمَةً عَلٰٓى اُصُوْلِهَا فَبِاِذْنِ اللّٰهِ وَلِيُخْزِيَ الْفٰسِقِيْنَ ⑤

(५) तिमीले खजूरहरुका जुन वृक्ष काटिदियौ तथा जसलाई तिमीले उनका जराहरुमाथि शेष रहन दियौ, यो सब अल्लाह (तआला) का आदेशबाट थियो तथा यसकारण पनि कि कुकर्मीहरुलाई अल्लाह (तआला) ले अपमानित गरोस् ।[1]

وَمَآ اَفَآءَ اللّٰهُ عَلٰى رَسُوْلِهٖ مِنْهُمْ فَمَآ اَوْجَفْتُمْ عَلَيْهِ مِنْ خَيْلٍ وَّلَا رِكَابٍ وَّلٰكِنَّ اللّٰهَ يُسَلِّطُ رُسُلَهٗ عَلٰى مَنْ يَّشَآءُ ۭ وَاللّٰهُ عَلٰى

(६) तथा उनको जो माल अल्लाह (तआला) ले आफ्ना सन्देष्टाका हात लगाएको छ जसमाथि तिमीले न घोडा दगुराएछौ तथा न ऊट, बरु अल्लाह (तआला) आफ्ना सन्देष्टालाई जसमाथि चाहन्छ प्रभावशाली गरिदिन्छ ।[2] तथा अल्लाह

[1] لِيْنَةٍ (लीनः) खजूरको एक प्रकार हो, जस्तै अज्वा, बर्नी आदि खजूरहरुका प्रकार हुन् । घेराउका समय मुसलमानहरुले रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमका आदेशानुसार बनू नजीरका खजूरहरुका वृक्षलाई आगो लगाइदिए, केही काटिदिए तथा केही छाडिदिए, जसको लक्ष्य शत्रुको आड (छेक) लाई समाप्त गर्नु तथा यो स्पष्ट गर्नु थियो कि अब मुसलमान तिमीमाथि प्रभुत्वशाली छन्, उनी तिम्रा धन-सम्पत्तिमा जे-पनि उपभोग गर्नुको सामर्थ्य राख्दछन् । अल्लाहले पनि मुसलमानहरुको यस नीतिलाई उचित ठहरायो तथा यसलाई समूदका अपमानको कारण बतायो ।

[2] बनू नजीरको यो क्षेत्र जो मुसलमानहरुको अधिकारमा आयो, मदीनाबाट ती न चार मीलको दूरीमा थियो । अर्थात् मुसलमानहरुलाई यसको लागि लामो यात्राको आवश्यकता परेन, अर्थात् मुसलमानहरुलाई ऊट, घोडाहरु दगुराउनु परेन । यस्तै लड्नु पनि परेन तथा सन्धिद्वारा यो क्षेत्र विजय भइहाल्यो । अर्थात् अल्लाहले आफ्ना रसूल सल्लल्लाहु अलैहि व सल्लमलाई नलडिकन उनीमाथि प्रभुत्व प्रदान गरिदियो । यसकारण यहाँबाट प्राप्त माललाई 'फै' मानियो जसको आदेश ग़नीमत (परिहार) भन्दा भिन्न छ । मानौं त्यो महल 'फैं' हो, जो शत्रु नलडिकन छाडेर भाग्छ अथवा सम्झौताले प्राप्त हुन्छ । तथा जो धन ग़नीमत रुपमा लडाई तथा प्रभुत्व प्राप्त गर्नाले प्राप्त होस्, त्यो 'ग़नीमत' हो । 'ग़नीमत'को नियम यो हो कि त्यसका पाँच भाग गरियून्, चार भाग मुजाहिदहरुमा विभाजित हुनेछन् तथा पाँचौं भाग अल्लाहका रसूलका लागि अर्थात् मुसलमानहरुका बैतुलमाल (कोष गृह) का

كُلِّ شَيْءٍ قَدِيْرٌ ⑥

مَا أَفَاءَ اللّٰهُ عَلٰى رَسُوْلِهٖ مِنْ أَهْلِ الْقُرٰى فَلِلّٰهِ وَلِلرَّسُوْلِ وَلِذِى الْقُرْبٰى وَالْيَتٰمٰى وَالْمَسٰكِيْنِ وَابْنِ السَّبِيْلِ كَيْ لَا يَكُوْنَ دُوْلَةًۢ بَيْنَ الْأَغْنِيَاءِ مِنْكُمْ ۚ وَمَا اٰتٰىكُمُ الرَّسُوْلُ فَخُذُوْهُ ۚ وَمَا نَهٰىكُمْ عَنْهُ فَانْتَهُوْا ۚ وَاتَّقُوا اللّٰهَ ۗ إِنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ⑦

तआ़ला प्रत्येक वस्तुमाथि सामर्थ्यवान छ ।

(७) वस्तीवालाहरुको जो (धन) अल्लाह (तआ़ला) ले तिमीलाई युद्ध नगरिकनै आफ्ना सन्देष्टाका हातमा दियो, त्यो अल्लाहको हो तथा रसूलको निकट सम्बन्धिहरुको, अनाथहरुको, निर्धन एवं यात्रीहरुको हो[1] ताकि तिम्रा धनवानहरुका हातमा नै यो धन चक्कर लगाउँदै नरहोस्,[2] तथा तिमीलाई जे-जति रसूल दिनुहुन्छ त लिइहाल र जसबाट रोक्नुहुन्छ रोकिहाल[3] तथा अल्लाह (तआ़ला) सित तर्सँदै

लागि छन् । परन्तु "फै" को माल मुजाहिदहरुमा बाँडिने छैनन् । सबै माल अल्लाहका रसूलको हो, अर्थात् मुसलमानहरुका बैतुल मालमा राखिनेछ ।

[1]यो पुनरावृत्ति जोड दिनका लागि छ । किन्तु यस आयतमा "फै" का मालको नियम पनि वर्णन गरिएको छ । यहाँ यो स्पष्ट गरियो कि यो आदेश केवल बनू नज़ीरका मालहरुका लागि छैन, बरु जहिले पनि जहाँ पनि यही आदेश हुनेछ । अल्लाहको नाम शुभका लागि हो । उद्देश्य रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम तथा उहाँका नातेदारहरुको चर्चा हो, जसबाट बनू हाशिम तथा बनू मुत्तलिब अभिप्राय हो । जस्तो कि हदीसमा वर्णित छ कि रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम यसमा आफ्ना पवित्र पत्नीहरुको पूरै वर्षको खर्च वसुल गर्नुहुन्थ्यो तथा शेष माल हतियारहरुको खरीदारी तथा जिहादको तयारीमा लगाइदिनु हुन्थ्यो । (सहीह बुख़ारी, तफ़सीर सूरतिल हश्र)

[2]دُوْلَةً (दूलह) त्यस कुरालाई भन्दछन् जो केही मानिसहरुका बीच डुल्दै रहोस्, तिनीहरुबाट बाहिर ननिस्कोस् । यो माल "फै" .का उपभोगको कारण भनिएको छ । त्यसलाई मुजाहिदीनमा विभाजित गर्नुको साटो बैतुल मालको भाग यसकारण ठहराइएको छ कि यो धन धनवानहरुका बीच नघुमिरहोस् । बरु समाजका योग्य मानिस पनि त्यसबाट लाभ प्राप्त गरून् ।

[3]यहाँ आदेश यद्यपि फ़ै का मालका सम्बन्धमा आएको छ जसको लक्ष्य मुसलमानहरुका हृदयमा अनुपालनको महत्व उजागर गर्नु हो कि जो माल उनले तिमीलाई दिनुहुन्छ, त्यो स्वीकार गरिहाल, जसबाट रोक्नुहुन्छ रोकिहाल । यसमा आफ्ना हृदयमा कुनै कमी कुनै संकोचको संवेद नगर, किन्तु आदेश साधारण छ । रसूलले जे पनि आदेश दिनुहुन्छ, त्यसलाई पूरा गर तथा जुन कामबाट रोक्नुहुन्छ त्यसका समीप नजाउ, किनकि अल्लाहले जो पनि धार्मिक आदेश (निषेधाज्ञा) दिएका छन्, त्यो रसूलकैद्वारा दिइएका छन् । अत: रसूलको अनुपालन

रह, नि:सन्देह अल्लाह (तआ़ला) कठोर यातनावाला छ ।

لِلْفُقَرَآءِ الْمُهٰجِرِيْنَ الَّذِيْنَ أُخْرِجُوْا مِنْ دِيَارِهِمْ وَأَمْوَالِهِمْ يَبْتَغُوْنَ فَضْلًا مِّنَ اللّٰهِ وَرِضْوَانًا وَّيَنْصُرُوْنَ اللّٰهَ وَرَسُوْلَهٗ ۚ أُولٰٓئِكَ هُمُ الصّٰدِقُوْنَ ﴿٨﴾

(८) (फै़ को धन) ती निर्धन मुहाजि़रहरुका लागि छ जो आफ्ना घरहरुबाट तथा आफ्ना धनहरुबाट निकाल दिइएका छन् । उनीहरु अल्लाहको कृपा तथा प्रसन्नताका इच्छुक छन् तथा अल्लाह (तआ़ला) को र त्यसका सन्देष्टाको सहायता गर्दछन्, यिनै सत्यवादी मानिस हुन् ।[1]

وَالَّذِيْنَ تَبَوَّءُو الدَّارَ وَالْإِيْمَانَ مِنْ قَبْلِهِمْ يُحِبُّوْنَ مَنْ هَاجَرَ إِلَيْهِمْ

(९) तथा (उनका लागि) जसले यस घरमा (अर्थात् मदीनामा) तथा ईमानमा उनीभन्दा पूर्व स्थान बनाएका छन्[2] तथा आफूतिर

नगरिकन धर्मविधानका अनुसार कर्म सम्भव छैन । सहीह हदीसमा वर्णित छ कि अब्दुल्लाह पुत्र मसऊदले एकपटक भने कि अल्लाह ती स्त्रीहरुमाथि धिक्कार गर्दछ जो टाटु (शरीरमा तस्वीर इत्यादि बनाउनु) गराउँछन् तथा जो टाटुको कार्य गर्दछन्, जो आफ्ना निधारका कपाल तल तथा जो शोभाका लागि आफ्ना अगाडीका दाँतहरुलाई टाढा-टाढा पार्छन् । एउटी आइमाईलाई थाहा भयो त मसऊदका पुत्रका पास आई तथा भनी कि मैले सुनेकी छु कि तपाईंले अमुक-अमुक महिलाहरुमाथि धिक्कार गर्नुभएको छ । उहाँले भन्नुभयो कि हो, सही छ । जसमाथि अल्लाहका र सूलले धिक्कार पठाउनु भएको छ तथा जो अल्लाहको किताबमा छ, म त्यसमाथि धिक्कार किन नपठाऊँ । त्यस महिलाले भनिन् कि मलाई त पूरा कुर्आनमा यो धिक्कार देखिएन । उहाँले भन्नुभयो : यदि तिमीले कुर्आन बुझेर पढेको भए त निश्चय यस कुरालाई त्यसमा पाउने थिईं । के तिमीले यो आयत पढेनौं ? ﴿وَمَا آتَاكُمُ الرَّسُوْلُ فَخُذُوْهُ وَمَا نَهَاكُمْ عَنْهُ فَانْتَهُوْا﴾ महिलाले भनिन् कि हो, यो आयत त छ । उहाँले भन्नुभयो कि अल्लाहका रसूलले यी कुराहरुबाट रोक्नु भएको छ जो महिलाहरु गर्दछन् । (सहीह बुख़ारी, तफ़सीर सूरतिल हश्र) अर्थात् इब्ने मसऊदले रसूलको आज्ञालाई स्वयं अल्लाहको आदेश भन्नुभयो ।

[1]यसमा "फै़" का मालको एउटा सही व्यय भन्नुभएको छ तथा साथै मुहाजि़रीनको श्रेष्ठता तथा विशुद्धता एवं उनको सत्यवादिताको स्पष्टीकरण छ, जसका पश्चात उनका ईमानमा सन्देह गर्नु मानौं कुर्आनको इन्कार गर्नु हो ।

[2]यसबाट अभिप्राय मदीनाका अन्सार हुन् जो मुहाजिरीन मदीनामा आउनुभन्दा पहिला मदीनामा आबाद थिए तथा मुहाजिरीन हिज़रत गरी आउनुभन्दा पहिला ईमान पनि उनका हृदयमा बसिसकेको थियो । यो अभिप्राय होइन कि मुहाजिरीनले ईमान स्वीकार गर्नुभन्दा पहिला यी अन्सार ईमान स्वीकार गरिराखेका थिए, किनकि उनको

وَلَا يَجِدُونَ فِي صُدُورِهِمْ حَاجَةً مِّمَّا أُوتُوا وَيُؤْثِرُونَ عَلَىٰ أَنفُسِهِمْ وَلَوْ كَانَ بِهِمْ خَصَاصَةٌ ۚ وَمَن يُوقَ شُحَّ نَفْسِهِ فَأُولَٰئِكَ هُمُ الْمُفْلِحُونَ ⑨

स्थानान्तरण गरी आउनेहरुसित प्रेम गर्दछन्, तथा मुहाजिरहरुलाई जे-जति दिइन्छ, त्यसबाट उनीहरु आफ्ना छातिमा कुनै संकोच गर्दैनन्,[1] बरु स्वयं आफूमाथि उनलाई प्राथमिकता दिन्छन् चाहे स्वयं उनलाई जति नै अधिक आवश्यकता होस्,[2] (कुरा यो हो) कि जो पनि आफ्नो मनोकांक्षाको कंजूसीबाट बचाइयो त्यही सफल (एवं लक्ष्य प्राप्त) छ ।[3]

अधिक संख्या मुहाज़िरीनले ईमान स्वीकार गर्नुका पश्चात् ईमान स्वीकार गरेको छ । अर्थात مِنْ قَبْلِهِمْ को अर्थ مِنْ قَبْلِ هِجْرَتِهِمْ हो तथा دار (दार) सित अभिप्राय دارالهجرة अर्थात् मदीना हो ।

[1]अर्थात् मुहाज़िरीनलाई अल्लाहका रसूल सल्लल्लाहु अलैहि व सल्लम जे-जति दिनुहुन्छ त्यसमा ईर्ष्या तथा संकोच महसुस गर्दैनन्, जस्तो "फ़ै" का मालको प्रथम अधिकारी पनि उनैलाई बनाइयो, किन्तु अन्सारले यसलाई नराम्रो मानेनन् ।

[2]अर्थात् आफ्ना मुक़ाबिलामा मुहाज़िरीनको आवश्यकतालाई प्राथमिकता दिन्छन्, स्वयं भूखा रहन्छन्, परन्तु मुहाज़िरीनलाई खुवाइदिन्छन् जस्तो हदीसमा बमोजिम आउँछ कि एक पटकको कुरा हो कि रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमका पास एउटा अतिथि आयो, परन्तु उहाँका घरमा खानका लागि केही थिएन । एउटा अन्सारीले उनलाई आफ्नो घर लग्यो । घर गई भन्यो त पत्नीले भनी कि घरमा त केवल बच्चाहरुको खाना छ । उनले परस्पर परामर्श गरे कि बच्चाहरुलाई भोकै सुताइदेओस् तथा हामी पनि यस्तै नै केही नखाईकन रहऔं । हो, अतिथिलाई खुवाउँदा खेरी दीप (चिराग) निभाइदिनु ताकि उसलाई हाम्रा विषयमा ज्ञान नहोस् कि हामीले त्यसका साथ खाना खाइराखेका छैनौं । बिहान जब ती सहाबी रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमको सेवामा उपस्थित भए त उहाँले उनीसित भन्नुभया् कि अल्लाह तआ़लाले तिमी दुबै पति-पत्नीका सम्बन्धमा यो आयत उतारेको छ وَيُؤْثِرُونَ على أنفسهم । (सहीह बुख़ारी, तफ़सीर सूरतिल हश्र) उनका त्यागको यो पनि एउटा विचित्र आदर्श हो कि पत्नीलाई तलाक़ दिनुको प्रस्ताव राख्यो कि इद्दत (अवधि) का पश्चात त्यससित त्यसको अर्को मुहाज़िर भाइले विवाह गरोस् । (बुख़ारी, किताबुन निकाह)

[3]हदीसमा छ कि मनोकांक्षाबाट बच किनकि यस मनोकांक्षाले पहिला मानिसहरुको विनाश गर्‍यो, त्यसैले उनलाई रक्तपातका लागि तयार गर्‍यो तथा उनले निषेधित (हराम) लाई वैध (उचित) बनाइहाले । (सहीह मुस्लिम, किताबुल बिर्र, बाबु तहरीमिज् जुल्मे)

وَالَّذِينَ جَاءُو مِنْ بَعْدِهِمْ يَقُولُونَ رَبَّنَا اغْفِرْ لَنَا وَلِإِخْوَانِنَا الَّذِينَ سَبَقُونَا بِالْإِيمَانِ وَلَا تَجْعَلْ فِي قُلُوبِنَا غِلًّا لِلَّذِينَ آمَنُوا رَبَّنَا إِنَّكَ رَءُوفٌ رَحِيمٌ ﴿١٠﴾

(१०) तथा (उनका लागि) जो उनका पश्चात आए, जो भन्नेछन् कि हे हाम्रा प्रभु ! हामीलाई क्षमा गरिदेउ तथा हाम्रा ती भाइहरुलाई पनि जो हामीभन्दा पूर्व ईमान स्वीकार गरिसकेका छन् तथा ईमान भएकाहरुको तर्फबाट हाम्रा हृदयमा कपट एवं शत्रुता नपार[1] हे हाम्रा प्रभु ! निःसन्देह तिमी प्रेम गर्ने एवं दयालु हौ ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ نَافَقُوا يَقُولُونَ لِإِخْوَانِهِمُ الَّذِينَ كَفَرُوا مِنْ أَهْلِ الْكِتَابِ لَئِنْ أُخْرِجْتُمْ لَنَخْرُجَنَّ مَعَكُمْ وَلَا نُطِيعُ فِيكُمْ

(११) के तिमीले अवसरवादीहरुलाई देखेनौ जो आफ्ना अहले किताब काफिर भाइहरुसित भन्छन् कि यदि तिमी देशबाट निकालियौ, भने हामीले पनि अवश्य तिमीसँग देश छाड्दिनेछौं तथा तिम्रा विषयमा हामीले कहिल्यै पनि

[1]यो "फै़" धनका पात्रहरुको तेस्रो प्रकार हो, अर्थात् सहाबाका पश्चात आउनेहरु तथा उनका अनुगामी यसमा ताबईन तबये ताबईन तथा केयामतसम्म हुनेवाला सबै ईमानवालाहरु तथा सदाचारी आइहाले । किन्तु प्रतिबन्ध यही छ कि ती अन्सार तथा मुहाजिरीनलाई मोमिन मानून् तथा उनका लागि क्षमाको प्रार्थना गरिराखेका होऊन्, न कि उनका ईमानमा सन्देह गरेका होऊन् तथा उनलाई अपशब्द भनुन् तथा उनका विरोधमा आफ्ना हृदयमा कपट तथा शत्रुताको भावना राख्दछन् । इमाम मालिकले यस आयतबाट अर्थ निकाल्दै यही कुरा भन्नुभएको छ ।

«إِنَّ الرَّافِضِيَّ الَّذِي يَسُبُّ الصَّحَابَةَ، لَيْسَ لَهُ فِي مَالِ الْفَيْءِ نَصِيبٌ؛ لِعَدَمِ اتِّصَافِهِ بِمَا مَدَحَ اللهُ بِهِ هٰؤُلَاءِ فِي قَوْلِهِمْ».

"अर्थात राफ़जीलाई, जो सहाबे किराम रज़ीयल्लाहु अन्हुलाई अपशब्द भन्दछन्, "फै़" का धनबाट भाग प्राप्त हुनेछैन, किनकि अल्लाह तआलाले सहाबे किरामको प्रशंसा गरेको छ तथा राफ़ेज़ी उनको निन्दा गर्दछन् ।" (इब्ने क़सीर) तथा आदरणीय आएशा रज़ियल्लाहु अन्हु भन्नुहुन्छ :

«أُمِرْتُمْ بِالِاسْتِغْفَارِ لِأَصْحَابِ مُحَمَّدٍ ﷺ فَسَبَبْتُمُوهُمْ! سَمِعْتُ نَبِيَّكُمْ يَقُولُ: «لَا تَذْهَبُ هٰذِهِ الْأُمَّةُ حَتَّى يَلْعَنَ آخِرُهَا أَوَّلَهَا».

"तिमीहरुलाई मुहम्मदका सहचरहरुका लागि क्षमा-याचनाको आदेश दिइयो, किन्तु तिमीले उनलाई अपशब्द भन्यौ । मैले तिम्रा नबीलाई यो भनिराखेको सुने कि यो सम्प्रदाय त्यस समयसम्म समाप्त हुनेछैन जबसम्मकि त्यसका पछि आउनेवाला पहिलाका मानिसहरुलाई अपशब्द नभनून ।" (इब्ने क़सीर, रवाहुल बग़वी)

أَحَدًا أَبَدًا ۙ وَإِن قُوتِلْتُمْ لَنَنصُرَنَّكُمْ وَاللَّهُ يَشْهَدُ إِنَّهُمْ لَكَاذِبُونَ ⑪

कसैको कुरा स्वीकार गर्ने छैनौं तथा यदि तिमीसित युद्ध गरिनेछ त अवश्य हामीले तिम्रो सहायता गर्नेछौं,[1] परन्तु अल्लाह (तआला) साक्ष्य दिन्छ कि यिनी सर्वथा झूठा छन् ।[2]

لَئِنْ أُخْرِجُوا لَا يَخْرُجُونَ مَعَهُمْ وَلَئِن قُوتِلُوا لَا يَنصُرُونَهُمْ وَلَئِن نَّصَرُوهُمْ لَيُوَلُّنَّ الْأَدْبَارَ ثُمَّ لَا يُنصَرُونَ ⑫

(१२) यदि उनी देशबाट निकालिए त यिनी उनका साथ जानेछैनन् तथा उनीसँग युद्ध शुरु भयो भने यिनले उनको सहायता (पनि) गर्नेछैनन्,[3] तथा यदि यो (मानिन्छ पनि कि) सहायतामा आइहाले पनि[4] त पिठ्यूँ देखाएर भाग्नेछन्,[5] अनि सहायता गरिने छैनन् ।[6]

لَأَنتُمْ أَشَدُّ رَهْبَةً فِي صُدُورِهِم مِّنَ اللَّهِ ۚ ذَٰلِكَ بِأَنَّهُمْ قَوْمٌ لَّا يَفْقَهُونَ ⑬

(१३) (मुसलमानहरु ! विश्वास गर) के तिम्रो भय उनका छातिहरुमा[7] अल्लाहका भयका तुलनामा निकै अधिक छ, यो यसकारण कि यिनी बुझ्दैनन् ।[8]

[1]ज़स्तो पहिला गुज्रिसक्यो कि बनू नज़ीरलाई मुनाफ़िकहरुले यो सन्देश पठाएका थिए ।

[2]जस्तो कि उनको झूठ खुलेर नै रहयो । बनू नज़ीर देश निकाला दिए, किन्तु यिनी उनको सहायताका लागि पुगे त उनका समर्थनका मदीना छाड्न तयार भए ।

[3]यो अवसरवादी (मुनाफ़िकहरु) का विगत मिथ्या वचनहरुको अधिक विवरण हो तथा यस्तै भयो, बनू नजीर देश निष्काशन दिइए तथा बनू कुरैज़ा हत गरिए तथा बन्दी बनाइए, परन्तु मुनाफ़िक उनका सहायताका लागि पुगेनन् ।

[4]यो काल्पनिक कुरा गरिदैछ, अन्यथा जुन कुरोलाई अल्लाहले नकारिदिन्छ त्यसको अस्तित्व कसरी सम्भव छ । अभिप्राय यो हो कि यदि यिनी यहूदको सहायता गर्नुका विचार गरून् ।

[5]अर्थात् पराजित भएर ।

[6]अभिप्राय यहूदी हुन् । अर्थात् जब उनका सहयोगी मुनाफ़िक नै पराजित भएर भाग्नेछन् भने यहूद कसरी विजयी तथा सफल हुनेछन् ? केही धर्मगुरुहरुले यसबाट अभिप्राय मुनाफ़िक लिएका छन् कि उनी सहायता गरिने छैनन् । बरु अल्लाहले उनीहरुलाई अपमानित गर्नेछ तथा उनको निफ़ाक़ (द्वयवाद) उनका लागि लाभप्रद हुनेछैन ।

[7]यहूदका वा मुनाफ़िक़हरुका अथवा सबैका हृदयमा ।

[8]अर्थात् तिम्रो यो भय उनका हृदयमा उनका नासम्झीको कारण हो । अन्यथा यदि उनी

لَا يُقَاتِلُونَكُمْ جَمِيعًا إِلَّا فِي قُرًى مُّحَصَّنَةٍ أَوْ مِن وَرَاءِ جُدُرٍ ۚ بَأْسُهُم بَيْنَهُمْ شَدِيدٌ ۚ تَحْسَبُهُمْ جَمِيعًا وَقُلُوبُهُمْ شَتَّىٰ ۚ ذَٰلِكَ بِأَنَّهُمْ قَوْمٌ لَّا يَعْقِلُونَ ﴿١٤﴾

(१४) यी सबै मिलेर पनि तिमीसित लड्न सक्दैनन्, परन्तु यो अलग कुरा हो कि गढ्ले घेरिएका स्थानहरुमा होऊन् अथवा पर्खालका ओट (पछाडी) मा होऊन्,[1] उनको लडाईं त आपसमै अत्यन्त कठोर छ,[2] यद्यपि तपाईं उनलाई एकमत ठानिराख्नु भएको छ किन्तु वास्तवमा उनका हृदय आपसमा भिन्न छन्,[3] यो यसकारण कि यिनी बुद्धीहीन मानिस हुन् ।[4]

كَمَثَلِ الَّذِينَ مِن قَبْلِهِمْ قَرِيبًا ۖ ذَاقُوا وَبَالَ أَمْرِهِمْ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿١٥﴾

(१५) ती मानिसहरुको जस्तो जो उनीभन्दा केही पहिला गुज्रेका छन्, जसले आफ्ना पापहरुको स्वाद चाखे[5] तथा जसका लागि दुखदायी यातना (तयार) छ ।[6]

बुद्धि राख्दथे भने बुझिहाल्थे कि मुसलमानहरुको प्रभुत्व तथा विजय अल्लाहको तर्फबाट छ, यसकारण तर्सनु अल्लाहसित नै पर्छ, न कि मुसलमानहरुसित ।

[1]अर्थात् यी यहूद तथा मुनाफ़िक मिलेर पनि खुला मैदानमा तिमीसित लड्नुका साहस राख्दैनन् । हो, दुर्गहरुमा बन्द भएर अथवा पर्खालका पछाडी लुकेर तिमीमाथि आक्रमण गर्न सक्लान्, जसबाट स्पष्ट छ कि अत्यन्त कायर छन् तथा तिम्रा भयले कम्पित तथा भयभीत छन् ।

[2]यिनी परस्पर घोर विरोधी छन् । यसकारण उनमा परस्पर झै-झगडा तथा अपमान सामान्य छ ।

[3]यी मुनाफ़िकहरुका आपसमा हृदयहरुको स्थिति हो, अथवा यहूद तथा मुनाफिकहरुका, अथवा मुशरिकहरु एवं अहले किताबका अभिप्राय यो हो कि यिनी सत्यका विरोधमा एक देखिन्छन्, किन्तु उनका हृदय एक छैनन् । उनी परस्पर विरोधी छन् तथा एक-अर्काका विपरीत रोश तथा शत्रुताले भरिएका छन् ।

[4]अर्थात यो मतभेद तथा छिन्न-भिन्नता उनका नासम्झीका कारण छ । यदि उनीसित समझ-बूझ भएको भए त यिनले सत्यलाई चिनिहाल्थे तथा यसलाई अपनाउँथें ।

[5]यसबाट केही ज्ञाताहरुले मक्काका बहुदेववादी (मुश्रिकीन) तात्पर्य लिएका छन्, जसलाई बनू नज़ीरका युद्धभन्दा केही पहिला बद्रका युद्धमा शिक्षाप्रद पराजय भएको थियो अर्थात् यिनी पनि अपमान तथा पराजयमा मुशरिकहरु सदृश्य नै छन् जसको समय निकट नै छ । केही अन्य ज्ञाताहरुले यहूदको दोस्रो क़बीला बनू कैनुकाअ अभिप्राय लिएका छन्, जसलाई बनू नज़ीरभन्दा पहिला देश निष्काशन दिएको थियो जो समय तथा स्थान दुबैका अनुसार उनका समीप थिए । (इब्ने कसीर)

[6]अर्थात् यो दण्ड जो उनीहरुले चाखे यो त सांसारिक दण्ड हो । आखिरतको दण्ड यसका अतिरिक्त हो जो अति दुखद हुनेछ ।

كَمَثَلِ الشَّيْطٰنِ اِذْ قَالَ لِلْاِنْسَانِ اكْفُرْ ۚ فَلَمَّا كَفَرَ قَالَ اِنِّيْ بَرِيْٓءٌ مِّنْكَ اِنِّيْٓ اَخَافُ اللّٰهَ رَبَّ الْعٰلَمِيْنَ ﴿١٦﴾

(१६) शैतानको जस्तो कि उसले मनुष्यसित भन्यो, कुफ्र गर, जब त्यो कुफ्र गरिसक्यो त भन्नलाग्यो कि म त तिमीबाट अलग्ग छु ।[१] म त अखिल जगतका प्रभुसित तर्सन्छु ।[२]

فَكَانَ عَاقِبَتَهُمَآ اَنَّهُمَا فِي النَّارِ خَالِدَيْنِ فِيْهَا ۗ وَذٰلِكَ جَزٰٓؤُا الظّٰلِمِيْنَ ﴿١٧﴾

(१७) त दुबैको परिणाम यो भयो कि (नरकको) अग्निका सधैंका लागि गए तथा अत्याचारीहरुको यही दण्ड हो ।[३]

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اتَّقُوا اللّٰهَ وَلْتَنْظُرْ نَفْسٌ مَّا قَدَّمَتْ لِغَدٍ ۚ وَاتَّقُوا اللّٰهَ ۗ اِنَّ اللّٰهَ خَبِيْرٌ ۢ بِمَا تَعْمَلُوْنَ ﴿١٨﴾

(१८) हे ईमान भएकाहरु ! अल्लाहसित तर्सदै रह[४] तथा प्रत्येक व्यक्ति देखिहालोस् कि भोलि (केयामत अर्थात् प्रलय) का लागि उसले कर्महरुको के (भण्डार) पठाएको छ ।[५] तथा (प्रत्येक) समय अल्लाहसित तर्सिराख अल्लाह तिम्रा सम्पूर्ण कर्महरुसित परिचित छ ।[६]



[१]यो यहूद तथा मुनाफ़िकहरुको अर्को उदाहरण दिएको छ कि मुनाफ़िकहरुले यहूदीहरुलाई यस्तै असहाय छाडिदिए जस्तो शैतान मानिससँग व्यवहार गर्दछ, पहिला त्यसले मानिसलाई पथभ्रष्ट गर्दछ जब मानिसले शैतानको अनुसरण गरी कुफ्र गरिसकेको हुन्छ न शैतान त्यससित आफ्नो निर्दोषता देखाउन थाल्छ ।

[२]शैतान आफ्नो यस कथनमा सच्चा छैन । उद्देश्य केवल त्यस कुफ्रबाट अलगाव तथा निर्दोषता देखाउनु हो, जो मानिस शैतानका मार्ग-विचलनबाट गर्दछ ।

[३]अर्थात् नरकको स्थाई यातना ।

[४]ईमान भएकाहरुलाई सम्बोधित गरी उनलाई सदुपदेश दिइँदैछ । अल्लाहसित तर्सनुको अर्थ हो उसले जुन कुराको आदेश दिएको छ तिनलाई पूरा गर, जसबाट रोकेको छ, त्यसबाट रोकिइहाल । आयतमा यो जोड दिनका लागि दुई पटक भनेको छ, किनकि यो 'तक़्वा' (अल्लाहको भय) ले नै मानिसलाई सत्कर्म गर्न तथा कुकर्मबाट रोकिनका लागि तयार गर्दछन् ।

[५]भोलिसित अभिप्राय केयामत (प्रलय) हो । त्यसलाई भोलिसित व्यञ्जित गरी यसतिर पनि संकेत गरिदियो कि त्यो घटित हुनु धेरै टाढा छैन, समीप नै छ ।

[६]जस्तो कि त्यसले प्रत्येकलाई त्यसका कर्मको फल दिनेछ, राम्रालाई राम्रो तथा नराम्रोलाई नराम्रो ।

وَلَا تَكُونُوا كَالَّذِينَ نَسُوا اللَّهَ فَأَنسَاهُمْ أَنفُسَهُمْ ۚ أُولَٰئِكَ هُمُ الْفَاسِقُونَ ﴿١٩﴾

(१९) तथा तिमी ती मानिसहरुको जस्तो नहुनु जसले अल्लाह (का आदेशहरुलाई) बिर्सिदिए, त अल्लाहले उनलाई स्वयं आफूबाट बिर्सिदियो । यस्ता मानिस नै अवज्ञाकारी (दुराचारी) हुन्छन् ।[1]

لَا يَسْتَوِي أَصْحَابُ النَّارِ وَأَصْحَابُ الْجَنَّةِ ۚ أَصْحَابُ الْجَنَّةِ هُمُ الْفَائِزُونَ ﴿٢٠﴾

(२०) नरकवाला तथा स्वर्गवाला, (आपसमा) समान छैनन्,[2] जो स्वर्गवालाहरु छन्, तिनै सफल छन् ।[3]

لَوْ أَنزَلْنَا هَٰذَا الْقُرْآنَ عَلَىٰ جَبَلٍ لَّرَأَيْتَهُ خَاشِعًا مُّتَصَدِّعًا مِّنْ

(२१) यदि हामीले यस कुरआनलाई कुनै पर्वतमाथि अवतरित गरेको भए,[4] त तिमीले देख्यौ कि अल्लाह

[1]अर्थात् अल्लाहले प्रतिकार स्वरुप उनीहरुलाई यस्तो गरिदिएको छ कि उनीहरु यस्ता कर्महरुबाट निश्चिन्त भइहाले जसमा उनको लाभ थियो तथा जसकाद्वारा स्वयंलाई अल्लाहको यातनाबाट बचाउन सक्थे । यसप्रकार मानिसले अल्लाहलाई बिर्सेर स्वयंलाई बिर्सन जान्छ । त्यसको मतले त्यसलाई सही निर्देश दिदैन, आँखाले त्यसलाई सत्यको मार्ग देखाउँदैनन् तथा त्यसका कान सत्य सुन्नबाट बहिरा हुनजान्छ । फलस्वरुप त्यसबाट यस्ता कर्म हुन्छन् जसमा उसको आफ्नो विनाश हुन्छ ।

[2]जसले अल्लाहलाई बिर्सेर यो कुरो पनि बिर्सिराखे कि यसप्रकार उनी स्वयं आफ्नै प्राणमाथि अत्याचार गरिराखेका छन् तथा एकदिन आउनेछ कि यसका फलस्वरुप उनका यो शरीर, जसका लागि उनी संसारमा ठूला-ठूला प्रयास र परिश्रम गर्थे, नरकको अग्निको इन्धन बन्नेछन्, तथा उनका मुकाबिलामा अन्य ती मानिस थिए जसले अल्लाहलाई याद राखे । त्यसका आदेशानुसार जीवन निर्वाह गरे । एक समय आउनेछ कि अल्लाह तआलाले उनीहरुलाई त्यसको उत्तम प्रतिउपकार प्रदान गर्नेछ तथा आफ्ना स्वर्गमा उनीहरुलाई प्रविष्ट गर्नेछ, जहाँ उनका आरामका लागि हरेक प्रकारका सुख-सुविधाहरु हुनेछन् । यी दुबै समूह अर्थात् नरकमा जाने तथा स्वर्गमा जानेहरु समान हुने छैनन् । अनि यिनी बराबर हुन पनि कसरी सक्दछन् ? एउटाले आफ्ना अन्त (परिणाम) लाई याद राख्यो तथा त्यसका लागि तयारी गरिरहयौ । दोस्रो आफ्ना अन्तबाट निश्चिन्त रहयो । यसकारण त्यसका लागि तयारीमा पनि अपराधपूर्ण विमुखता अपनायो ।

[3]जस्तै परीक्षाको तयारी गर्नेवाला सफल तथा असफल हुन्छ । यसैप्रकार ईमान भएका तथा संयमी स्वर्ग प्राप्त गर्नमा सफल हुनेछन्, किनकि उनले संसारमा यसका लागि सत्कर्म गरी तयारी गर्दैरहे । संसार कर्मगृह तथा परीक्षा घर जस्तो छ, जसले यस तथ्यलाई बुझ्यो तथा त्यसले परिणामसित निश्चिन्त भई जीवन निर्वाह गरेनन् त्यो सफल रहयो तथा जो संसारको वास्तविकतालाई बुझ्नबाट विवश तथा परिणामबाट विमुख अवज्ञा एवं दुराचारमा लीन रहयो उनी क्षतिग्रस्त तथा असफल हुनेछन् ।

[4]र पर्वतहरुमा समझ एवं ज्ञानको त्यो क्षमता पैदा गरिदिन्थे जो हामीले मनुष्यभित्र राखेका छौं ।

خَشْيَةِ اللّٰهِ ۭ وَتِلْكَ الْاَمْثَالُ نَضْرِبُهَا لِلنَّاسِ لَعَلَّهُمْ يَتَفَكَّرُوْنَ ۝

का भयले त्यो झुकेर कण-कण भइहाल्थे ।[1] हामीले यी उदाहरणहरुलाई मानिसहरुका समक्ष वर्णन गर्दछौं ताकि उनीहरुले चिन्तन-मनन गरून् ।[2]

هُوَ اللّٰهُ الَّذِيْ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ عٰلِمُ الْغَيْبِ وَالشَّهَادَةِ ۚ هُوَ الرَّحْمٰنُ الرَّحِيْمُ ۝

(२२) त्यही अल्लाह हो जसका अतिरिक्त कोही (सत्यवान) पूज्य छैन, गुप्त[3] एवं प्रकटको जान्नेवाला, त्यही क्षमा तथा दया गर्नेवाला ।

هُوَ اللّٰهُ الَّذِيْ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ اَلْمَلِكُ الْقُدُّوْسُ السَّلٰمُ الْمُؤْمِنُ الْمُهَيْمِنُ الْعَزِيْزُ الْجَبَّارُ الْمُتَكَبِّرُ ۭ سُبْحٰنَ اللّٰهِ عَمَّا يُشْرِكُوْنَ ۝

(२३) त्यही अल्लाह हो जसका अतिरिक्त कोही (सत्यवान) पूज्य छैन, स्वामी, अत्यन्त पवित्र, सबै दोषहरुबाट मुक्त, शान्ति प्रदान गर्नेवाला, रक्षक, प्रभावशाली, शक्तिशाली, महान, पवित्र छ अल्लाह ती वस्तुहरुबाट जसलाई यिनी त्यसको साझीदार बनाउँछन् ।

[1]अर्थात् हामीले पवित्र कुरआनमा जो प्रभाव, स्वच्छता, शक्ति एवं तर्क तथा शिक्षा एवं उपदेशका यस्ता पक्ष वर्णन गरेका छौं कि तिनलाई सुनेर पर्वत पनि यति कठोरता, विस्तार एवं उचाईका उपरान्त अल्लाहका भयले कण-कण हुनजान्थ्यो । यो मानिसलाई भनिराखेको तथा सम्झाइँदै छ कि तिमीलाई सोच-समझको योग्यता दिएको छ, किन्तु यदि कुरआन सुनेर तिम्रो हृदयमाथि कुनै प्रभाव पर्दैन भने तिम्रो परिणाम राम्रो हुनेछैन ।

[2]ताकि उनीहरुले कुरआनका आदेशहरुबाट शिक्षा ग्रहण गरून् तथा धम्कीहरुलाई सुनेर अवज्ञाहरुबाट बचून् । केही धर्मविद्हरु भन्दछन् कि यस आयतमा नबी सल्लल्लाहु अलैहि व सल्लमलाई सम्बोधित गरिएको छ कि हामीले तपाईंमाथि यो पवित्र कुरआन उतार्यौं जो यस्तो प्रतिष्ठावान छ कि यदि हामीले कुनै पर्वतमाथि उतारथ्यौं जो यस्तो प्रतिष्ठावान छ कि यदि हामीले कुनै पर्वतमाथि उतार्थ्यौं भने कण-कण हुनजान्थ्यो । किन्तु तपाईंमाथि हाम्रो यो अनुग्रह छ कि हामीले तपाईंलाई यति दृढ एवं बलवान गरिदियौं कि तपाईंले यस कुरोलाई सहन गरिहाल्नुभयो जसलाई सहन गर्नुको शक्ति पर्वतमा पनि छैन । (फ़तहुल क़दीर) त्यसका पश्चात अल्लाह तआला आफ्ना गुणहरुको वर्णन गरिराखेको छ, जसको उद्देश्य तौहीदलाई प्रमाणित गर्नु तथा शिर्क (अनेकेश्वरवाद) को खण्डन हो ।

[3]परोक्ष सृष्टिका विश्वाससित छ । अन्यथा अल्लाहका लागि कुनै वस्तु अप्रत्यक्ष छैन । अभिप्राय यो हो कि त्यो सृष्टिको प्रत्यक्ष वस्तुलाई जान्दछ, चाहे त्यो अगाडी होस् अथवा हामीबाट ओझेल, यहाँसम्मकि त्यो अँध्यारोमा हिंडिराखेको कमिलालाई पनि जान्दछ ।

هُوَ اللّٰهُ الْخَالِقُ الْبَارِئُ الْمُصَوِّرُ لَهُ الْأَسْمَاءُ الْحُسْنٰى ۚ يُسَبِّحُ لَهُ مَا فِي السَّمٰوٰتِ وَالْأَرْضِ ۚ وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٢٤﴾

(२४) त्यही अल्लाह हो पैदा गर्नेवाला, बनाउनेवाला,[1] रुप दिनेवाला, त्यसैका लागि (अत्यन्त) शुभनाम छन् ।[2] प्रत्येक वस्तु चाहे आकाशहरुमा होस् अथवा धर्तीमा होस् त्यसको पवित्रताको वर्णन गर्दछ,[3] तथा त्यही प्रभावशाली एवं हिक्मत भएको छ ।[4]

## سُورَةُ الْمُمْتَحِنَةِ

## सूरतुल मुम्तहिनः-६०

सूरः मुम्तहिन मदीनामा अवतरित भएको तथा यसमा तेह्र आयतहरु तथा दुई रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَتَّخِذُوا

(१) हे ती मानिसहरु जसले ईमान स्वीकार गरेका हौ ! मेरा तथा आफ्ना शत्रुहरुलाई आफ्ना मित्र नबनाउ,[5] तिमी

---

[1] भन्दछन् कि خلق (ख़ल्क) को अभिप्राय आफ्नो इच्छा तथा इरादाका अनुसार अनुमान लगाउनु हो तथा برأ (बर्अ) को अर्थ त्यसलाई पैदा गर्नु, गढ्नु, अस्तित्वमा ल्याउनु ।

[2] أسماء حسنى (अल्लाहका शुभनामहरुको चर्चा) सूरः आराफ १८० मा भइसकेको छ ।

[3] स्थितिबाट तथा मुखबाट पनि जस्तो कि पहिला वर्णित भयो ।

[4] जुन कुराको निर्णय गर्दछ त्यो हिक्मतबाट खाली हुँदैन ।

[5] मक्काका काफ़िरहरु तथा नबी सल्लल्लाहु अलैहि व सल्लम बीच हुदैबीयामा जो सम्झौता भएको थियो तथा मक्कावालाहरुले त्यसको उल्लंघन गरे । यसकारण रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमले पनि गुप्त रुपबाट मुसलमानहरुलाई लडाईंको आदेश दिनुभयो । आदरणीय हातिम पुत्र अबू-बल्तआ एउटा बद्री मुहाजिर सहाबी थिए जसलाई कुरैशका साथ कुनै नाता थिएन, परन्तु उनकी पत्नी तथा बच्चाहरु मक्कामै थिए । उनले सोचे कि मैले मक्काका कुरैशलाई उहाँको तयारीसित सूचित गरिदिन्छु ताकि यस उपकारका फलस्वरुप उनी मेरो बालबच्चाहरुको ध्यान राखून् । उनले यो सन्देश एउटी नारीका माध्यमबाट लिखित रुपमा मक्कावासीहरुतिर पठाइदिनुभयो, जसको सूचना नबी सल्लल्लाहु अलैहि व सल्लमलाई प्रकाशनाद्वारा दिइयो । उहाँले आदरणीय अली, मिक़दाद तथा जुबैरसित भन्नुभयो कि जाउ रौज़ये खाख (एक स्थानको नाम) मा एउटा महिला हुनेछ जो मक्का गइराखेको हुनेछ, त्यससित एउटा पत्र छ, त्यो लिएर आउ । यिनीहरु गए एवं त्यसबाट त्यो पत्र ल्याए,

عَدُوِّيْ وَعَدُوَّكُمْ اَوْلِيَاۤءَ تُلْقُوْنَ اِلَيْهِمْ بِالْمَوَدَّةِ وَقَدْ كَفَرُوْا بِمَا جَاۤءَكُمْ مِّنَ الْحَقِّ ۚ يُخْرِجُوْنَ الرَّسُوْلَ وَاِيَّاكُمْ اَنْ تُؤْمِنُوْا بِاللّٰهِ رَبِّكُمْ ۗ اِنْ كُنْتُمْ خَرَجْتُمْ جِهَادًا فِيْ سَبِيْلِيْ وَابْتِغَاۤءَ مَرْضَاتِيْ تُسِرُّوْنَ اِلَيْهِمْ بِالْمَوَدَّةِ ۖ وَاَنَا اَعْلَمُ بِمَاۤ اَخْفَيْتُمْ وَمَاۤ اَعْلَنْتُمْ ۗ وَمَنْ يَّفْعَلْهُ مِنْكُمْ فَقَدْ ضَلَّ سَوَاۤءَ السَّبِيْلِ ①

त मित्रताले उनीतिर सन्देश पठाउँछौ,[१] र उनीहरु त्यस सत्यको जो तिम्रो पासमा आइसकेको छ, इन्कार गर्दछन्, सन्देष्टालाई तथा स्वयं तिमीलाई पनि मात्र यसकारणले निष्काशित गर्दछन् कि तिमी आफ्ना प्रभुमा ईमान स्वीकार गर्दछौ ।[२] यदि तिमी मेरा मार्गमा धर्मयुद्धका लागि तथा मेरो प्रसन्नताको खोजमा निस्केका छौ (त उनीसित मित्रता नगर)[३] तिमी उनका पास प्रेमको सन्देश लुकाइ-लुकाइ पठाउँदछौ तथा मलाई राम्ररी ज्ञात छ जो तिमीले लुकाएका थियौ तथा त्यो पनि यस कार्यलाई गर्नेछ त्यो निःसन्देह सोझो मार्गबाट विचलित हुनेछ ।[४]

जुन उसले टाउकाका कपालहरुमा लुकाएका थिई । उहाँले आदरणीय हातिमसित सोध्नुभयो कि यो तिमीले के गर्‍यौ। उनले भने कि यो काम मैले कुफ्र तथा इस्लाम धर्मबाट विमुख हुन जानका लागि गरिन । बरु यसको कारण केवल यो हो कि अन्य मोहाजिरहरुका सम्बन्धी मक्कामा छन् जो उनका बालबच्चाहरुको रक्षा गर्दछन् । मेरो त्यहाँ कोही सम्बन्धी छैन । त मैले सोंचे कि मक्कावालाहरुलाई सूचित गरिदिऊ, ताकि उनी मेरा आभारी रहून् तथा मेरा बच्चाहरुको रक्षा गरून् । उहाँले उनको सच्चाईको कारण उनलाई केही भन्नुभएन । तैपनि अल्लाहले चेतावनीका रुपमा यी आयतहरु उतार्‍यो ताकि भविष्यमा कुनै मुसलमानले कुनै काफिरका साथ यस्तो मैत्री सम्बन्ध स्थापित नगरुन् । (सहीह वुखारी, तफसीर सूरतिल मुम्तहिनः, मुस्लिम किताबु फज़ायेलिस सहाबा)

[१]अर्थ यो हो कि नबी सल्लल्लाहु अलैहि व सल्लमको सूचना उनीसम्म पुऱ्याएर उनीसित मैत्री सम्बन्ध स्थापित गर्न चाहन्छौ ?

[२]जब उनको तिमीसँग तथा सत्यसँग यो व्यवहार छ त तिम्रा लागि के यो उचित छ कि तिमी उनीसित प्रेम तथा सहानुभूतिको व्यवहार गर ?

[३]यो शर्तका लुप्त उत्तरको अनुवाद हो ।

[४]अर्थात् मेरा र आफ्ना शत्रुहरुसित प्रेमको नाता जोड्नु तथा उनलाई गुप्त रुपमा पत्र एवं सन्देश पठाउनु पथभ्रष्टताको मार्ग हो, जो कुनै पनि मुसलमानको मर्यादाका अनुरुप छैन ।

إِن يَثْقَفُوكُمْ يَكُونُوا لَكُمْ أَعْدَآءً وَيَبْسُطُوٓا إِلَيْكُمْ أَيْدِيَهُمْ وَأَلْسِنَتَهُم بِالسُّوٓءِ وَوَدُّوا لَوْ تَكْفُرُونَ ②

(२) यदि उनीहरु तिमीमाथि कहीं नियन्त्रण पाउँछन् भने त उनी तिम्रा (खुला) शत्रु हुनजान्छन् तथा नराम्रोसँग तिमीमाथि हात उठाउन थाल्छन् तथा अपशब्द भन्न थाल्छन् तथा (हृदयले) चाहन्छन् कि तिमी पनि कुफ्र गर्नथाल ।[1]

لَن تَنفَعَكُمْ أَرْحَامُكُمْ وَلَآ أَوْلَٰدُكُمْ يَوْمَ الْقِيَٰمَةِ يَفْصِلُ بَيْنَكُمْ وَاللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ③

(३) तिम्रो नातेदारी (एवं सम्बन्ध) तथा सन्तान तिमीलाई केयामत (प्रलय) का दिन काम आउने छैनन्[2] अल्लाह (तआ़ला) तिम्रामध्ये निर्णय गरिदिनेछ[3] तथा तिमीले जे-जति गरिराखेका छौ, त्यसलाई अल्लाह राम्ररी देखिराखेको छ ।

قَدْ كَانَتْ لَكُمْ أُسْوَةٌ حَسَنَةٌ فِىٓ إِبْرَٰهِيمَ وَالَّذِينَ مَعَهُۥٓ إِذْ قَالُوا لِقَوْمِهِمْ إِنَّا بُرَءَٰٓؤُا

(४) (मुसलमानहरु !) तिम्रा लागि (आदरणीय) इब्राहीममा तथा उनका साथीहरुमा अति उत्तम नमूना छ,[4] जबकि ती सबैले आफ्ना समुदायसित स्पष्ट शब्दहरुमा भने कि हामी

[1]अर्थात तिम्रा विरोधमा उनका हृदयमा त यसप्रकार बैर छ र तिमी छौ कि उनका साथ प्रेम बढाईराखेका छौ ।

[2]अर्थात जुन सन्तानका लागि तिमी काफ़िरहरुसित प्रेम देखाउँछौ, यी तिम्रा कुनै काम आउने छैनन्, अनि त्यसका कारण तिमी काफ़िरहरुसित मित्रता गरेर किन अल्लाहलाई अप्रसन्न गर्दछौ ? केयामतका दिन जुन कुरो काम आउनेछ त्यो त अल्लाह तथा त्यसका रसूल सल्लल्लाहु अलैहि व सल्लमको आज्ञापालन हो, यसको प्रबन्ध गर ।

[3]दोस्रो अर्थ हो तिम्रा बीच विभेद (अलग़ाव) पारिदिनेछ, अर्थात् आज्ञाकारीहरुलाई स्वर्गमा तथा अवज्ञाकारीहरुलाई नरक़मा लग्नेछ । केही ज्ञाताहरु भन्छन् कि आपसमा अलग़ावको अभिप्राय हो कि एक-अर्काबाट भाग्नेछन्, जस्तो भन्यो :

﴿يَوْمَ يَفِرُّ الْمَرْءُ مِنْ أَخِيهِ﴾

"त्यसदिन मानिस भाइ भाइबाट भाग्नेछ ।" (सूरः अबस-३४)

[4]अर्थात् काफ़िरहरुसित मैत्री सम्बन्ध नराख्नुका विषयका स्पष्टीकरणमा आदरणीय इब्राहीमको उदाहरण दिईदैछ । أُسْوَةٌ (उस्वा) को अर्थ हो यस्तो 'आदर्श' जसको अनुकरण गरियोस् ।

مِنكُمْ وَمِمَّا تَعْبُدُونَ مِن دُونِ اللَّهِ كَفَرْنَا بِكُمْ وَبَدَا بَيْنَنَا وَبَيْنَكُمُ الْعَدَاوَةُ وَالْبَغْضَاءُ أَبَدًا حَتَّىٰ تُؤْمِنُوا بِاللَّهِ وَحْدَهُ إِلَّا قَوْلَ إِبْرَاهِيمَ لِأَبِيهِ لَأَسْتَغْفِرَنَّ لَكَ وَمَا أَمْلِكُ لَكَ مِنَ اللَّهِ مِن شَيْءٍ رَّبَّنَا عَلَيْكَ تَوَكَّلْنَا وَإِلَيْكَ أَنَبْنَا وَإِلَيْكَ الْمَصِيرُ ④

तिमीसित तथा ज-जसको तिमीले अल्लाहको अतिरिक्त पूजा गर्दछौ, ती सबैसित पूर्णरुपमा विमुख छौं ।[१] हामी तिम्रा (विश्वासलाई) अस्वीकार गर्दछौं, र जबसम्म तिमी अल्लाह एक हुने कुरोमा ईमान स्वीकार गर्दैनौ हामी र तिमीमा सधैंका लागि कपट एवं वैर उत्पन्न भइहाल्यो,[२] परन्तु इब्राहीमको यति कुरो त आफ्ना पितासित भएको थियो कि[३] म तिम्रो लागि क्षमा-याचना अवश्य गर्नेछु तथा तिम्रा लागि मलाई अल्लाहका समक्ष कुनै अधिकार पनि छैन । हे हाम्रा प्रभु ! तिमीमाथि नै हामीले भरोसा गरेका छौं[४] तथा तिमीतिरै हामी आकर्षित हुन्छौं तथा तिमीतिरै पुनः आउनुछ ।

[१]अर्थात् शिर्कका कारणले हाम्रो तथा तिम्रो कुनै सम्बन्ध छैन । अल्लाहका पूजारीहरुका अल्लाह बाहेकका उपासकहरुसित के लगाव ?

[२]अर्थात यो विलगाव तथा विमुखता त्यस समयसम्म रहनेछ जबसम्म तिमी कुफ्र एवं शिर्कलाई त्याग गरी तौहीद (अद्वैत) लाई अपनाउँदैनौ । हो, जब तिमी एक अल्लाहलाई मान्न थाल्नेछौ त त्यसपछि यो बैर प्रेममा तथा शत्रुता प्रेम भावमा बदलिनेछ ।

[३]यो एउटा अनुबन्ध हो जो في إبراهيم लुप्त सम्बन्धमा छ । अभिप्राय यो हो कि इब्राहीम अलैहिस्सलामको पूरा जीवन एउटा अनुसरण योग्य नमूना हो । हो, उनी आफ्ना पिताका लागि क्षमाको प्रार्थना एउटा यस्तो कर्म हो जसमा उनको अनुसरण गर्नु हुँदैन, किनकि उनको यो कर्म उनको त्यो कर्म त्यस समयको हो जब उनलाई आफ्ना पिताका विषयमा ज्ञान थिएन, परन्तु जब उनलाई स्पष्ट भयो कि त्यो पिता अल्लाहको शत्रु हो त उनले आफ्ना पितासित पनि विमुखता व्यक्त गरिदिए जस्तो कि सूरः बराअत ११४ मा छ । (सूरः बराअत, सूरः तौबालाई भनिन्छ)

[४] توكـل (भरोसा) को अर्थ हो यथासम्भव प्रत्यक्ष सम्बन्धहरुलाई अपनाउनुका पश्चात मामिला अल्लाहलाई समर्पित गरिदेओस् । यो अर्थ होइन कि संसाधनहरुलाई न अपनाइकन अल्लाहमाथि भरोसा देखाइयोस् । यसबाट हामीलाई रोकिएको छ । एउटा व्यक्ति नबी सल्लल्लाहु अलैहि व सल्लमको सेवामा उपस्थित भयो तथा ऊँटलाई बाहिर खडा गरेर भित्र आइहाल्यो । उहाँ सल्लल्लाहु अलैहि व सल्लमले सोध्नुभयो त भने कि मैले ऊट अल्लाहलाई समर्पित गरेर आएको छु । उहाँले भन्नुभयो कि त्यो भरोसा होइन ।

رَبَّنَا لَا تَجْعَلْنَا فِتْنَةً لِّلَّذِينَ كَفَرُوا وَاغْفِرْ لَنَا رَبَّنَا ۚ إِنَّكَ أَنتَ الْعَزِيزُ الْحَكِيمُ ﴿٥﴾

(५) हे हाम्रा प्रभु ! तिमीले हामीलाई काफिरहरुको परीक्षामा नपार[1] तथा हे हाम्रा प्रभु ! हाम्रा त्रुटिहरुलाई क्षमा गर, निःसन्देह तिमी नै प्रभावशाली एवं हिक्मतवाला छौ ।

لَقَدْ كَانَ لَكُمْ فِيهِمْ أُسْوَةٌ حَسَنَةٌ لِّمَن كَانَ يَرْجُو اللَّهَ وَالْيَوْمَ الْآخِرَ ۚ وَمَن يَتَوَلَّ فَإِنَّ اللَّهَ هُوَ الْغَنِيُّ الْحَمِيدُ ﴿٦﴾

(६) निःसन्देह हाम्रा लागि तिनमा[2] उत्तम आदर्श (तथा श्रेष्ठ अनुसरण छ विशेषगरी) प्रत्येक त्यस व्यक्तिका लागि जो अल्लाह तथा केयामत (प्रलय) का दिनको साक्षात्कारमा विश्वास राख्दछन्,[3] तथा यदि कोही विमुख हुन्छ[4] त अल्लाह (तआला) पूर्णरुपमा निस्पृह तथा बडाई एवं प्रशंसाका योग्य छ ।

عَسَى اللَّهُ أَن يَجْعَلَ بَيْنَكُمْ وَبَيْنَ الَّذِينَ عَادَيْتُم مِّنْهُم مَّوَدَّةً ۚ

(७) के आश्चर्य को निकट नै अल्लाह (तआला) तिमी र तिम्रा शत्रुहरुमा प्रेम उत्पन्न गरिदेओस्,[5] अल्लाह (तआला) लाई सबै

اعْقِلْ وَ تَوَكَّلْ

"पहिला त्यसलाई बाँध अनि भरोसा गर ।" (तिर्मिज़ी) إنابة (इनाबः) को अर्थ हो अल्लाहतिर ध्यान गर्नु ।

[1]अर्थात् काफिरहरुलाई हामीमाथि प्रभुत्व तथा अधिपत्य प्रदान नगर, यस्तोमा उनीहरु सोच्नेछन् कि उनी सत्यमा छन् तथा यसप्रकार हामी उनका परीक्षा बन्नेछौं । अथवा अभिप्राय यो हो कि उनका हातहरु वा आफ्नो तर्फबाट हामीलाई कुनै यातना नदेउ, यसप्रकार पनि हाम्रो अस्तित्व उनका लागि परीक्षा बन्नेछ । उनीहरु भन्नेछन् कि यदि यिनी सत्यमा भएको भए उनलाई यो दुख किन पुग्थ्यो ?

[2]अर्थात् इब्राहीम अलैहिस्सलाम तथा ईमानवाला साथीहरुमा यो पुनरावृत्ति जोड दिनका लागि छ ।

[3]किनकि यस्तै मानिस अल्लाह तथा आख़िरतको यातनासित तर्सन्छन् । यिनै मानिस स्थिति तथा घटनाहरुबाट शिक्षा ग्रहण गर्दछन् ।

[4]अर्थात् आदरणीय इब्राहीम अलैहिस्सलामका आदर्शलाई अपनाउनबाट भागे ।

[5]अर्थात् उनीहरुलाई मुसलमान बनाएर तिम्रो भाइ तथा साथी बनाइदेओस्, जसबाट तिम्रा बीचका शत्रुता मैत्री तथा प्रेममा बदलिनेछ ।

وَاللَّهُ قَدِيرٌ ۚ وَاللَّهُ غَفُورٌ رَّحِيمٌ ۝٧

सामर्थ्य छ तथा अल्लाह अत्यन्त क्षमाशील, अत्यन्त दयालु छ ।

لَا يَنْهَاكُمُ اللَّهُ عَنِ الَّذِينَ لَمْ يُقَاتِلُوكُمْ فِي الدِّينِ وَلَمْ يُخْرِجُوكُم مِّن دِيَارِكُمْ أَن تَبَرُّوهُمْ وَتُقْسِطُوا إِلَيْهِمْ ۚ إِنَّ اللَّهَ يُحِبُّ الْمُقْسِطِينَ ۝٨

(८) जुन मानिसहरुले तिमीसित धर्मका विषयमा युद्ध गरेनन्[१] तथा तिमीलाई देशबाट निकालेनन्,[२] उनका साथ उत्तम व्यवहार एवं उपकार गर्न तथा न्यायपूर्ण व्यवहार गर्नबाट अल्लाह (तआला) ले तिमीलाई रोक्दैन ।[३] (अपितु) निःसन्देह अल्लाह (तआला) ले त न्याय गर्नेहरुसित प्रेम गर्दछ ।[४]

तथा यस्तै नै भयो, मक्का विजयका पश्चात मानिस समूहहरुमा मुसलमान हुन आरम्भ भए तथा उनी मुसलमान हुनासाथ घृणाहरु प्रेममा परिणत भए, जो मुसलमानहरुका रक्तका पिपासु थिए उनी मित्र तथा सहयोगी वनिहाले ।

[१]यो ती काफ़िरहरुका सम्बन्धमा निर्देश दिईदैछ, जो मुसलमानहरुसित केवल इस्लाम धर्मका कारण रोष तथा शत्रुता राख्दैनन् तथा यस आधारमा मुसलमानहरुसित लड्दैनन्, यो पहिलो शर्त हो ।

[२]अर्थात तिमीसँग यस्तो नीति पनि अपनाएनन् कि तिमी हिज़रत (प्रवास) मा बाध्य हुनजाऊ । यो दोस्रो शर्त हो । एउटा तेस्रो शर्त यो हो जो अधिको आयतबाट स्पष्ट हुन्छ कि उनी मुसलमानहरुका विरुद्ध अन्य काफ़िरहरुलाई कुनै प्रकारको सहायता नपुऱ्याउन्, विचार-विमर्शले र न हथियारहरु आदिसित ।

[३]अर्थात् यस्ता काफ़िरहरुसित उपकार तथा न्यायको व्यवहार निषेध छैन जस्तो आदरणीय अस्मा पुत्री अबू-बक्र सिद्दीकले आफ्नी मुश्रिक आमाका सन्दर्भमा नाता जोड्नु अर्थात् सद्व्यवहार गर्नुका बारेमा सोध्नुभयो त उहाँले भन्नुभयो । صلي أمك "आफ्नी आमाका साथ उपकार गर ।" (सहीह बुख़ारी, सहीह मुस्लिम, किताबुज़्ज़कात, बाबु फज़्लिन नफ़क़ते बस्सद्कते अलल अकरबीन तथा बुख़ारी, किताबुल अदब, बाबु सिलतिल वालेदीन मुशरिक)

[४]यसमा न्याय गर्नुको प्रलोभन (प्रोत्साहन) छ यहाँसम्मकि काफ़िरहरुको साथ पनि । हदीसमा न्याय गर्नेहरुको प्रतिष्ठा यसप्रकार वर्णन गरिएको छ ।

«إِنَّ الْمُقْسِطِينَ عِنْدَ اللهِ، عَلَىٰ مَنَابِرَ مِنْ نُورٍ، عَنْ يَمِينِ الرَّحْمٰنِ عَزَّ وَجَلَّ - وَكِلْتَا يَدَيْهِ يَمِينٌ - الَّذِينَ يَعْدِلُونَ فِي حُكْمِهِمْ وَأَهْلِيهِمْ، وَمَا وَلُوا».

"न्यायकारी प्रकाशका मञ्चमा हुनेछन् जो रहमान (दयानिधि) का दायाँतिर हुनेछन् तथा रहमानका दुबै हात दायाँतिर छन्, जो आफ्ना निर्णयमा, आफ्ना परिवादमा तथा

إِنَّمَا يَنْهَىٰكُمُ اللَّهُ عَنِ الَّذِينَ قَٰتَلُوكُمْ فِي الدِّينِ وَأَخْرَجُوكُم مِّن دِيَٰرِكُمْ وَظَٰهَرُوا عَلَىٰٓ إِخْرَاجِكُمْ أَن تَوَلَّوْهُمْ ۚ وَمَن يَتَوَلَّهُمْ فَأُولَٰٓئِكَ هُمُ الظَّٰلِمُونَ ⑨

(९) अल्लाह (तआला) ले तिमीलाई केवल ती मानिसहरुसित प्रेम गर्नबाट रोक्दछ, जसले तिमीसित धर्मका विषयमा युद्ध गरे तथा तिमीलाई देशबाट निकाले एवं देशबाट निष्काशित गर्नेहरुको सहायता गरे, जो मानिस यस्ता काफ़िरहरुसित प्रेम गर्दछन्[1] तिनै (निश्चित रुपमा) अत्याचारी हुन् ।[2]

يَٰٓأَيُّهَا الَّذِينَ ءَامَنُوٓا إِذَا جَآءَكُمُ الْمُؤْمِنَٰتُ مُهَٰجِرَٰتٍ فَامْتَحِنُوهُنَّ ۖ

(१०) हे ईमान भएकाहरु ! जब तिम्रा पासमा मुसलमान महिलाहरु स्थानान्तरण गरेर आउँछन् त तिमीले उनको परीक्षा लिनेगर ।[3] वास्तवमा

आफ्नो प्रजामा न्यायको प्रबन्ध गर्दछन् ।" (सहीह मुस्लिम, किताबुल इमारः, बाबु फजीलतिल इमामिल आदिल)

[1]अर्थात् अल्लाहका निर्देश एवं प्रभुका आदेशबाट मुख फर्काएर ।

[2]किनकि उनीहरुले यस्ता मानिसहरुसित प्रेम गरेका छन् जो प्रेमका योग्य थिएनन्, तथा यसरी उनीहरुले आफ्ना प्राणहरुमाथि अत्याचार गरे कि उनलाई अल्लाहका प्रकोपका लागि प्रस्तुत गरिदिए । अर्को स्थानमा भन्नुभयो :

﴿ لَا تَتَّخِذُوا الْيَهُودَ وَالنَّصَٰرَىٰٓ أَوْلِيَآءَ ۘ بَعْضُهُمْ أَوْلِيَآءُ بَعْضٍ ۚ وَمَن يَتَوَلَّهُم مِّنكُمْ فَإِنَّهُۥ مِنْهُمْ ۗ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الظَّٰلِمِينَ ﴾

"तिमी यहूदी एवं इसाईलाई मित्र नबनाउ यिनी त परस्पर नै एक-अर्काका मित्र हुन् । तिमीमध्ये जसले पनि उनीहरुमध्ये कसैलाई मित्रता गर्दछ, त्यो निःसन्देह उनीहरुमध्ये नै हो । अत्याचारीहरुलाई अल्लाह तआला कदापि सन्मार्ग देखाउँदैन ।" (अल-मायदः-५१)

[3]हुदैबीया सन्धिको एक खण्ड यो थियो कि मक्काबाट कोही मुसलमानहरुका पास जानेछ भने त्यसलाई फर्काउनु पर्नेछ, किन्तु त्यसमा स्त्री-पुरुषको स्पष्टीकरण थिएन । प्रत्यक्ष रुपमा أَحَدٌ (कोही) मा दुबै सम्मिलित थिए । केही महिलाहरु पछि मक्काबाट प्रस्थान गरेर मदीना आइहाले त काफ़िरहरुले उनको वापसीको माँग गरे, जसमाथि अल्लाहले यो आयत मुसलमानहरुका निर्देशनका लागि उतार्‍यो तथा यो आदेश दियो । परीक्षा लिनुको अभिप्राय हो यस कुराको खोजी गर कि हिज़रत गरेर जो महिलाहरु आएका छन् तथा ईमान व्यक्त गरिराखेका छन्, आफ्ना काफ़िर पतिसित अप्रसन्न भएर कुनै मुसलमानका प्रेममा अथवा कुनै अन्य उद्देश्यले त आएका छैनन् तथा केवल यहाँ शरण लिनका लागि त ईमानको दावा गरिराखेका छैनन् ।

ٱللَّهُ أَعْلَمُ بِإِيمَٰنِهِنَّ ۖ فَإِنْ عَلِمْتُمُوهُنَّ مُؤْمِنَٰتٍ فَلَا تَرْجِعُوهُنَّ إِلَى ٱلْكُفَّارِ ۖ لَا هُنَّ حِلٌّ لَّهُمْ وَلَا هُمْ يَحِلُّونَ لَهُنَّ ۖ وَءَاتُوهُم مَّآ أَنفَقُوا۟ ۚ وَلَا جُنَاحَ عَلَيْكُمْ أَن تَنكِحُوهُنَّ إِذَآ ءَاتَيْتُمُوهُنَّ أُجُورَهُنَّ ۚ وَلَا تُمْسِكُوا۟ بِعِصَمِ ٱلْكَوَافِرِ وَسْـَٔلُوا۟ مَآ أَنفَقْتُمْ وَلْيَسْـَٔلُوا۟ مَآ أَنفَقُوا۟ ۚ ذَٰلِكُمْ حُكْمُ ٱللَّهِ ۖ يَحْكُمُ بَيْنَكُمْ ۚ وَٱللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿١٠﴾

उनका ईमानलाई राम्ररी जान्ने त अल्लाह नै छ, परन्तु यदि तिनीहरु तिमीलाई ईमानवाली प्रतीत हुन्छन्[१] त अब तिमी तिनीहरुलाई काफ़िरहरुतिर नफर्काउ, यिनी उनका लागि हलाल (वैध) छैनन् तथा न उनीहरु यिनीहरुका लागि (वैध) छन्,[२] तथा जो खर्च ती काफ़िरहरुको भएको छ त्यो उनीहरुलाई तिरिदेउ,[३] ती महिलाहरुलाई उनको महर दिएर उनीसित विवाह गर्नुमा तिमीमाथि कुनै पाप छैन,[४] तथा काफ़िर महिलाहरुका विवाह बन्धनलाई आफ्ना अधीनमा न राख[५] तथा जे-जति तिमीले

[१]अर्थात तिमी आफ्नो खोजीबाट यस परिणामसम्म पुग तथा तिमीलाई अनुमान हुन जाओस् कि यो वास्तवमा ईमान स्वीकार गर्दछे ।

[२]यो उनलाई उनका काफ़िर पतिहरुका पास वापस नपठाउनुको कारण हो कि अब कुनै मुसलमान महिला कुनै काफ़िरका लागि वैध छैन, जस्तो कि इस्लामका आरम्भमा यो वैध थिएन, जस्तो कि नबी सल्लल्लाहु अलैहि वसल्लमकि पुत्री आदरणीय ज़ैनबको विवाह अबुल-आसबिन रबीअसँग भएको थियो, जबकि उनी मुसलमान थिएनन् । किन्तु यस आयतले भविष्यमा यस्तो गर्नबाट रोकिदियो । यसकारण यहाँ भनिएको छ कि एक-अर्काका लागि वैध छैन, यसकारण उनीहरुलाई काफिरलाई फिर्ता नगर । हो, यदि पति पनि मुसलमान हुन्छ त विवाह यथावत रहनेछ, चाहे पति हिज़रत गरेर पत्नीका पश्चात आओस् ।

[३]अर्थात उनका काफ़िर पतिहरुलाई जो महर (स्त्रीधन) उनलाई दिएका छन् त्यो तिमी उनलाई दिदेऊ ।

[४]यो मुसलमानहरुसित भनिंदैछ कि यी महिलाहरु जो ईमानका लागि आफ्ना पतिहरुलाई छाडेर तिम्रा पासमा आएका छन्, तिमी उनीसित विवाह गर्न सक्दछौ, प्रतिबन्ध यो छ कि उनको महर उनीहरुलाई दिदेऊ, किन्तु यो विवाह सुन्नतका अनुसार नै हुनेछ, अर्थात एक त इद्दत पूरा हुनु (गर्भाशयको स्वच्छता) का पश्चात हुनेछ, दोस्रो त्यसमा वली (संरक्षक) को अनुमति तथा दुई न्यायी साक्षीहरुको उपस्थिति पनि अनिवार्य छ । हो, पछि स्त्रीसित पतिले सहवास गरेको छैन भने बिना अवधि तुरुन्त विवाह पनि वैध छ ।

[५] عِصَمٌ एसम عِصْمَةٌ (इस्मत) को बहुवचन हो । यहाँ यसबाट अभिप्राय विवाह बन्धन हो । अर्थ यो हो कि यदि पति मुसलमान भइहाल्छ तथा पत्नी यथावत काफ़िर एवं मुश्रिक रहन्छ भने पत्नीलाई आफ्नो विवाहमा राख्नु वैध छैन ।

खर्च गरेका छौ[1] माँगिहाल, तथा जे-जति ती काफ़िरहरुले खर्च गरेका छन् त्यो पनि माँगिहाल,[2] यो अल्लाहको निर्णय हो जो तिम्रामध्ये गरिराखेको छ,[3] र अल्लाह (तआ़ला) सर्वज्ञ (एवं) हिक्मतवाला (तत्वदर्शी) छ ।

(११) तथा यदि तिम्रो कुनै पत्नी तिम्रा हातबाट निस्किहाल्छ तथा काफ़िरका पासमा जान्छ, अनि तिमीलाई बदलाको समय मिल्छ[4] त जसका पत्नीहरु गएका छन् उनीहरुलाई

وَإِن فَاتَكُمْ شَيْءٌ مِّنْ أَزْوَاجِكُمْ إِلَى الْكُفَّارِ فَعَاقَبْتُمْ فَآتُوا الَّذِينَ ذَهَبَتْ أَزْوَاجُهُم مِّثْلَ

त्यसलाई तुरुन्त तलाक़ दिएर आफूबाट अलग गरियोस् । तथा यस आदेशका पश्चात आदरणीय उमर रज़ियल्लाहु अन्हुले आफ्ना दुई मुश्रिक पत्नीहरुलाई तथा आदरणीय तलहा पुत्र उबैदुल्लाहले आफ्नो पत्नीलाई तलाक़ दिनुभयो । (इब्ने क़सीर) हो, यदि पत्नी किताबिया (यहूदी र इसाई) छ भने त्यसलाई तलाक़ दिनु आवश्यक छैन, किनकि उनीसित विवाह उचित (वैध) छ । यसकारण यदि त्यो पहिलादेखि नै पत्नीका रुपमा तिम्रो पासमा छ त इस्लाम स्वीकार गर्नुका पश्चात त्यसलाई अलग गर्नुको आवश्यकता छैन ।

[1]अर्थात् ती महिलाहरुका लागि जो कुफ्रमा स्थिर रहनुका कारण काफ़िरहरुका पास गइसकेका छन् ।

[2]अर्थात् ती महिलाहरुका लागि जो हिज़रत गरी मदीना आएका छैन ।

[3]अर्थात् यो उपरोक्त आदेश कि दुबै एक-अर्काको महरको धन तिरुन् बरु माँग गरिहालून्, अल्लाहको आदेश छ । इमाम कुर्तबी भन्नुहुन्छ कि यो आदेश त्यस युगका साथ नै विशेष थियो । यसमाथि मुसलमानहरुको इज्माअ (सहमति) छ । (फ़तहुल क़दीर) यसको कारण त्यो सम्झौता हो जो दुबै पक्षहरुका बीच भएको थियो । यसप्रकार सम्झौता हुनुको दशामा भविष्यमा पनि तदानुसार काम गर्न अनिवार्य हुनेछ, अन्यथा होइन ।

[4] فَعَاقَبْتُمْ (त तिमी यातना देऊ अथवा बदला देऊ) को एक एउटा भावार्थ यो हो कि मुसलमान भएर आउने महिलाहरुका महरको अधिकार, जो तिमीलाई उनका काफ़िर हुनका कारण काफ़िरहरुका पास गइसकेका छन्, तथा उनले मुसलमानहरुलाई महर तिरेनन् । (अर्थात् यो पनि दण्डको एउटा रुप हो) दोस्रो भावार्थ यो हो कि तिमी काफ़िरहरुसित ज़िहाद गर तथा ग़नीमत (परिहार) को माल प्राप्त होस् । त्यसमा विभाजनमा पहिला ती मुसलमानहरुलाई देऊ, जसका

مَآ اَنۡفَقُوۡا ؕ وَاتَّقُوا اللّٰهَ الَّذِیۡۤ اَنۡتُمۡ بِهٖ مُؤۡمِنُوۡنَ ⑪

उनका खर्चका समान तिरिदेउ, तथा त्यस अल्लाहसित तर्सिराख जसमाथि तिमी ईमान स्वीकार गरेका छौ ।

یٰۤاَیُّهَا النَّبِیُّ اِذَا جَآءَكَ الۡمُؤۡمِنٰتُ یُبَایِعۡنَكَ عَلٰۤی اَنۡ لَّا یُشۡرِكۡنَ بِاللّٰهِ شَیۡـًٔا وَّلَا یَسۡرِقۡنَ وَلَا یَزۡنِیۡنَ وَلَا یَقۡتُلۡنَ اَوۡلَادَهُنَّ وَلَا یَاۡتِیۡنَ بِبُهۡتَانٍ یَّفۡتَرِیۡنَهٗ بَیۡنَ اَیۡدِیۡهِنَّ وَاَرۡجُلِهِنَّ وَلَا یَعۡصِیۡنَكَ فِیۡ مَعۡرُوۡفٍ فَبَایِعۡهُنَّ وَ اسۡتَغۡفِرۡ لَهُنَّ اللّٰهَ ؕ

(१२) हे रसूल (सन्देष्टा) ! जब मुसलमान महिलाहरु तपाईंसित यी कुराहरुमा वचन दिन आउँछन् कि उनीहरु अल्लाहका साथ कसैलाई साझेदार बनाउने छैनन्, चोरी गर्ने छैनन, व्यभिचार गर्ने छैनन्, आफ्ना सन्तानलाई मार्ने छैनन् तथा न कुनै यस्ता आक्षेप लगाउनेछन् जो स्वयं आफ्ना हात-खुट्टाका अगाडी रचून् तथा कुनै पुण्य कार्यमा तिम्रो अवज्ञा गर्नेछैनन्, त तपाईं उनीसित वचन लिइहाल्ने गर्नुस्[1]

पत्नीहरु काफ़िर देश (दारुल कुफ़्र) मा गइहालेका छन् उनका खर्चका मात्रामा तिरिदेऊ । मानौं ग़नीमतको मालबाट मुसलमानहरुको क्षतिपूर्ति पनि दण्ड हो । (ऐसरुत्तफ़ासीर तथा इब्ने क़सीर) यदि ग़नीमतका मालबाट पनि क्षतिपूर्ति हुँदैन भने बैतुल मालबाट सहायता गरियोस् ।

[1]यो बैअत (प्रतिज्ञा) त्यसैबेला लिन्थे जब महिलाहरु हिज़रत गरेर आउँथे, जस्तो कि सहीह बुख़ारी तफ़सीर सूरः मुम्तहिनामा छ । यसका अतिरिक्त मक्का विजयका दिन पनि आफ्ना क़ुरैशका महिलाहरुसित बैअत लिनुभयो बैअत (प्रतिज्ञा) लिंदाखेरि उहाँ सल्लल्लाहु अलैहि वसल्लम केवल मौखिक वचन लिनुहुन्थ्यो । कुनै महिलाका हातलाई स्पर्श गर्नुहुन्नथ्यो । आदरणीय आयशा भन्नुहुन्छ कि “अल्लाहको सौगन्ध, बैअतमा नबी सल्लल्लाहु अलैहि वसल्लमले कहिल्यै कुनै महिलाको हात छुनु भएन । बैअत लिंदाखेरि केवल उहाँ सल्लल्लाहु अलैहि व सल्लम मुखले यो भन्नुहुन्थ्यो कि मैले यस कुरामा तिमीसित वचन लिइहालें ।” (सहीह बुख़ारी, तफ़सीर सूरः मुम्तहिना) बैअतमा उहाँ सल्लल्लाहु अलैहि व सल्लम महिलाहरुसित यो वचन पनि लिनुहुन्थ्यो कि उनीहरुले विलाप पनि गर्ने छैनन्, लुगा च्यातेर रुने छैनन्, टाउकाको कपाल पनि तान्ने छैनन्, अज्ञानकालको जस्तै शोकालाप गर्ने छैनन् । (सहीह बुख़ारी तथा मुस्लिम आदि) यस बैअतमा नमाज़, रोज़ा (ब्रत), हज्ज, ज़कात (अनिवार्य दान) आदिको चर्चा छैन, किनकि यिनी धर्मका स्तम्भ तथा इस्लामका प्रतीक हुन् । यसकारण यिनका स्पष्टीकरणको आवश्यकता छैन । उहाँले विशेषहरुपले ती कुराहरुका प्रतिज्ञा महिलाहरुसित लिनुभयो जो साधारणत: महिलाहरुमा पाईन्छ, ताकि उनी धार्मिक कर्तव्यहरुका पालनाका साथ यी कुराहरुबाट पनि बचून् । यसबाट यो पनि विदित भयो कि विद्वानहरु, उपदेशक तथा भाषणकर्ताहरुलाई आफ्नो पूरा

إِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ⑫

तथा उनका लागि अल्लाहसित क्षमा माँग्नुस्, निःसन्देह (अल्लाह तआला) क्षमाशील दयालु छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَتَوَلَّوْا قَوْمًا غَضِبَ اللَّهُ عَلَيْهِمْ قَدْ يَئِسُوا مِنَ الْآخِرَةِ كَمَا يَئِسَ الْكُفَّارُ مِنْ أَصْحَابِ الْقُبُورِ ⑬

(१३) हे मुसलमानहरु ! तिमी त्यस सुमदायसित मित्रता नराख, जसमाथि अल्लाहको प्रकोप आइसकेको छ[1] जो आख़िरतबाट यसप्रकार निराश भइसकेका छन् जस्तो कि मृत्यु, कब्रवालाहरुसित काफ़िर निराश छन् ।[2]

## سُورَةُ الصَّفِّ

## सूरतुस सफ़्फ़-६१

सूरः सफ़्फ़* मदीनामा अवतरित भएको, यसमा चौदह आयतहरु एवं दुई रुकूअ छन् ।

बल धार्मिक कर्तव्यहरुमा नै लगाउनु हुँदैन जो पहिलादेखि नै स्पष्ट छ, बरु ती रीति तथा परम्पराहरुको पनि प्रभावशाली ढङ्गले खण्डन गर्नुपर्छ जो समाजमा साधारणतः प्रचलित छन् नमाजी तथा ब्रतालु मानिसहरु पनि यसबाट बच्दैनन् ।

[1]यसबाट केही धर्मविदहरुले यहूद । केहीले अवसरवादी (मुनाफ़िक) तथा केहीले काफ़िर तात्पर्य लिएका छन् । यो अन्तिम कुरो नै अधिक सही छैन, किनकि यसमा यहूद तथा द्वयवादी पनि आउँछन् । यसका अतिरिक्त सबै काफ़िर नै अल्लाहका प्रकोपका अधिकारी छन् । अतः अभिप्राय यो हुनेछ कि कुनै पनि काफ़िरसित मैत्री सम्बन्ध नराख जस्तो कि यो विषय कुरआनका अनेक स्थानहरुमा वर्णन गरिएको छ।

[2]आख़िरतबाट निराश हुनुको अर्थ क़्यामतको स्थापनाबाट इन्कार हो । أصحاب القبور (कब्रहरुमा) भएका मानिसहरुसित निराश हुनुको अभिप्राय यही हो कि परलोकमा पुनः जीवित गरिने छैन । एउटा अर्को अर्थ यसको यो गरिएको छ कि कब्रहरु (समाधि) मा गाडिएका काफ़िर प्रत्येक भलाईबाट निराश भइहाले, किनकि मरेर उनीहरुले आफ्ना कुफ़्रका परिणाम देखिहाले । अब तिनीहरु भलाईको के आशा गर्न सक्दछन् । (इब्ने ज़रीर तबरी)

*यस सूरःका अवतरणका कारणमा वर्णित छ कि केही सहाबा (नबीका सहचर) आपसमा कुरा गरिराखेका थिए कि अल्लाहलाई जो कर्म सर्वाधिक प्रिय छ, त्यो रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमसित सोध्नुपर्छ ताकि तदानुसार कर्म गरियोस्, किन्तु उहाँका पासमा गई सोध्नुको साहस कसैले गरिराखेको थिएन । यसमाथि अल्लाहले यो सूरः उतार्‍यो । (मुसनद अहमद ५/४५२, तिर्मिजी तफ़सीर सूरतिस्सफ़्फ़)

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं कृपालु छ ।

سَبَّحَ لِلَّهِ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۖ وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ①

(१) आकाशहरु एवं धर्तीको प्रत्येक वस्तु अल्लाह तआलाको पवित्रताको वर्णन गर्दछ, तथा त्यही प्रभावशाली एवं तुरुन्त तत्वदर्शी छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لِمَ تَقُولُونَ مَا لَا تَفْعَلُونَ ②

(२) हे ईमानवालाहरु ![1] तिमीले ती कुरा किन भन्दछौ जो स्वयं गर्दैनौ ?

كَبُرَ مَقْتًا عِنْدَ اللَّهِ أَنْ تَقُولُوا مَا لَا تَفْعَلُونَ ③

(३) तिमी जे गर्दैनौ, त्यो भन्नु अल्लाह (तआला) लाई अत्यन्त अप्रिय छ ।[2]

إِنَّ اللَّهَ يُحِبُّ الَّذِينَ يُقَاتِلُونَ فِي سَبِيلِهِ صَفًّا كَأَنَّهُمْ بُنْيَانٌ مَرْصُوصٌ ④

(४) निःसन्देह अल्लाह (तआला) ती मानिसहरुलाई प्रिय मान्दछ जो त्यसका मार्गमा पंक्तिबद्ध भएर जिहाद गर्दछन्, जस्तो कि उनीहरु सिसा (धातु) ले निर्मित भवन हुन् ।[3]

وَإِذْ قَالَ مُوسَىٰ لِقَوْمِهِ يَا قَوْمِ لِمَ تُؤْذُونَنِي وَقَدْ تَعْلَمُونَ أَنِّي رَسُولُ اللَّهِ إِلَيْكُمْ ۖ فَلَمَّا زَاغُوا

(५) तथा (याद गर) जब मुसाले आफ्ना समुदायसित भने कि हे मेरा समुदायका मानिसहरु ! तिमी मलाई किन पीडित गरिराखेका छौ जबकि तिमीलाई राम्ररी ज्ञात छ कि म तिमीतिर

[1]यहाँ पुकार यद्यपि सामान्य छ किन्तु वास्तवमा सम्बोधन ती मुसलमानहरुसित छ जो भनिराखेका थिए कि हामीलाई أَحَبُّ الأعمال (सर्वाधिक प्रिय कर्म) को ज्ञान होस् त उनीहरुलाई गरौं, किन्तु जब उनीहरुलाई केही प्रिय कर्म भनिए त उनी शिथिल भइहाले । यसमा यस्ता मानिसहरुलाई झपारिंदैछ कि भलाईका कुरा जो भन्दछौ त्यो किन गर्दैनौ ? जुन कुरा मुखबाट निकाल्दछौ त्यसलाई पूरा किन गर्दैनौ ? जो मुखबाट बोल्दछौ, त्यसको पालना किन गर्दैनौ ?

[2]यो यसैमाथि अधिक जोड दिइएको छ कि अल्लाह यस्ता मानिसहरुमाथि अत्याधिक अप्रसन्न हुन्छ ।

[3]यो जिहादको एक अत्यन्त पुण्यकार्य भनियो जो अल्लाहलाई प्रियकर छ ।

اَزَاغَ اللّٰهُ قُلُوْبَهُمْ ؕ وَاللّٰهُ لَا يَهْدِى الْقَوْمَ الْفٰسِقِيْنَ ۝

अल्लाहको सन्देष्टा हुँ,[1] त जब उनीहरु बाङ्गो नै रहे त उनका हृदयहरुलाई अरु बाङ्गो गरिदियो,[2] तथा अल्लाह (तआला) अवज्ञाकारी समुदायलाई मार्गदर्शन गर्दैन ।

وَاِذْ قَالَ عِيْسَى ابْنُ مَرْيَمَ يٰبَنِىْٓ اِسْرَآءِيْلَ اِنِّىْ رَسُوْلُ اللّٰهِ اِلَيْكُمْ مُّصَدِّقًا لِّمَا بَيْنَ يَدَىَّ مِنَ التَّوْرٰىةِ وَمُبَشِّرًاۢ بِرَسُوْلٍ يَّاْتِىْ

(६) तथा जब मरियमका पुत्र ईसाले भने कि (हे मेरा समुदाय) इस्राईलको सन्तान ! म तिमी सबैतिर अल्लाहको सन्देष्टा हुँ, म भन्दा पूर्वको पुस्तक तौरातको पुष्टि गर्ने व्यक्ति हुँ[3] तथा आफ्ना पश्चात आउने एउटा

[1]यो जान्दा-जान्दै पनि कि आदरणीय मूसा अलैहिस्सलाम अल्लाहका सच्चा रसूल हुन् । इस्राईलको सन्तानले उनलाई आफ्ना मुख (कुरा) बाट कष्ट दिन्थ्यो, यहाँसम्मकि त्यही शारीरिक दोष उनीसित सम्बन्धित गर्दथ्यो जबकि त्यो रोग उनमा थिएन ।

[2]अर्थात् ज्ञान हुँदाहुँदै सत्यबाट मुख फर्काए तथा सत्यको तुलनामा असत्यलाई, भलाईको तुलनामा नराम्रो कुरालाई तथा ईमानको तुलनामा कुफ्रलाई अपनाए, त अल्लाहले त्यसका दण्डस्वरुप उनका हृदयलाई स्थायीरुपले सन्मार्गबाट फर्काइदियो, किनकि यही अल्लाहको रीति चलिआइराखेको छ । कुफ्र तथा कुमार्गमा नियमितता एवं निरन्तरता नै हृदयहरुमा मोहर (छाप) लाग्नुको कारण हुन्छ । अनि अवज्ञा, कुफ्र तथा अत्याचार उसको स्वभाव एवं आचरण बन्न जान्छ, जसलाई कसैले परिवर्तन गर्न सक्दैन । यसकारण अगाडी भन्यो : “अल्लाह अवज्ञाकारीहरुलाई मार्गदर्शन दिदैंन ।” किनकि अल्लाह तआला यस्ता मानिसहरुलाई आफ्ना नियमानुसार मार्ग-विचलित गरिसकेको हुन्छ । अब कसले त्यसलाई सत्यमार्ग देखाउन सक्छ जसलाई यसप्रकार अल्लाहले मार्ग-विचलित गरेको छ ?”

[3]ईशदूत ईसा अलैहिस्सलामको कथाको वर्णन यसकारण गऱ्यो कि इस्राईलका सन्तानले जस्तो ईशदूत मूसा अलैहिस्सलामको अवहेलना गऱ्यो, त्यसतै उनीहरुले आदरणीय ईसाको पनि इन्कार गरे । यसमा नबी सल्लल्लाहु अलैहि व सल्लमलाई सान्त्वना दिइँदैछ कि यी यहूद तपाईं सल्लल्लाहु अलैहि व सल्लमका साथ नै यस्ता गरिराखेका छैनन्, अपितु यिनको त पूरा इतिहास नै ईशदूतहरुलाई झुठ्लाउनुसित पूर्ण छ । तौरातको पुष्टिको अभिप्राय यो हो कि म जो निमन्त्रण दिइराखेको छु, त्यो त्यही हो जो तौरातको पनि निमन्त्रणा हो, जो यस कुराको प्रमाण हो कि जो पैग़म्बर भन्दा पहिला तौरात लिएर आए र अब म इंजील (ग्रन्थ) लिएर आएको छु हामी दुवैको मूल उद्गम एउटा नै छ । यसकारण तिमी जुनप्रकार मूसा हारुन, दाऊद एवं सुलैमानमाथि ईमान स्वीकार गऱ्यौ म माथि पनि ईमान स्वीकार गर, यसकारण कि म तौरात (ग्रन्थ) को पुष्टि गरिराखेको छु, न कि त्यसका खण्डन ।

مِنْۢ بَعْدِى اسْمُهٗٓ اَحْمَدُ ۭ فَلَمَّا جَاۗءَهُمْ بِالْبَيِّنٰتِ قَالُوْا هٰذَا سِحْرٌ مُّبِيْنٌ ۝

सन्देष्टाको शुभसूचना सुनाउनेवाला हूँ जसको नाम अहमद हो ।[1] अनि जब उनी तिनका समक्ष स्पष्ट निशानीहरु लिएर आए त उनीहरुले भन्नथाले कि यो त खुला जादू हो ।[2]

وَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَي اللّٰهِ الْكَذِبَ وَهُوَ يُدْعٰٓى اِلَى الْاِسْلَامِ ۭ وَاللّٰهُ لَا يَهْدِي الْقَوْمَ الظّٰلِمِيْنَ ۝

(७) तथा त्यस व्यक्तिभन्दा अधिक अत्याचारी को होला जो अल्लाह (तआ़ला) माथि झूठ कुरा रचोस् ?[3] जबकि त्यो इस्लामतिर बोलाइन्छ ।[4] तथा अल्लाह यस्ता अत्याचारीहरुलाई मार्गदर्शन गर्दैन ।

यो आदरणीय ईसा अलैहिस्सलामले आफ्ना पश्चात आउने अन्तिम ईशदूत आदरणीय मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको शुभ-सूचना सुनाउनुभयो । जस्तो कि नबी सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो :

«أَنَا دَعْوَةُ أَبِي إِبْرَاهِيمَ وَبِشَارَةُ عِيسَى - عليه السلام - »

"म आफ्ना पिता इब्राहीमको प्रार्थना तथा ईसाको शुभ-सूचनाको चरितार्थ हुँ ।" (ऐसरुत्तफ़ासीर)

[1]'अहमद' यो कर्ताबाट यदि अतिश्योक्तिको रुप हो भने त अर्थ हुनेछ अन्य अरु मानिसहरुभन्दा अल्लाहको अधिक प्रशंसा गर्नेवाला, तथा यदि कर्मकारकबाट छ भने अर्थ हुनेछ कि उहाँ सल्लल्लाहु अलैहि व सल्लमका गुण तथा विशेषताहरुका कारण जति प्रशंसा उहाँको गरियो, यति कसैको पनि गरिएन । (फ़तहुल क़दीर)

[2]अर्थात् आदरणीय ईसाद्वारा प्रस्तुत गरिएका चमत्कारहरुलाई जादू भने, जस्तो विगत जातिहरु पनि आफ्ना पैग़म्बरहरुलाई यसैप्रकार भन्दैरहे । केही विद्वानहरुले यसबाट तात्पर्य मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमलाई लिएका छन् तथा قَالُوْا को कर्ता मक्काका काफ़िरहरुलाई बनाएका छन् ।

[3]अर्थात अल्लाहको सन्तान बनाए अथवा जो पशु उसले निषेध (हराम) गरेन उनलाई निषेध (हराम) गरे ।

[4]जो सबै धर्महरुमा उत्तम तथा उच्चतम छ, अत: जो यस्तो हुन्छ त्यसलाई कहिल्यै यो शोभा दिन्छ कि त्यसले कुनै अन्यमाथि मिथ्यारोपण गरोस्, कहाँ यो कुरो कि अल्लाहमाथि आरोप लगाओस् ?

يُرِيْدُوْنَ لِيُطْفِـُٔوْا نُوْرَ اللّٰهِ بِاَفْوَاهِهِمْ ۗ وَاللّٰهُ مُتِمُّ نُوْرِهٖ وَلَوْ كَرِهَ الْكٰفِرُوْنَ ⑧

(८) तिनीहरु चाहन्छन् कि अल्लाहको दिव्य-ज्योतिलाई आफ्नो फूँकले निभाइदेऊन्[1] तथा अल्लाह आफ्नो दिव्य-ज्योतिलाई उच्च पदहरुसम्म लग्नेवाला हो,[2] चाहे काफिर नराम्रो मानून्।

هُوَ الَّذِيْٓ اَرْسَلَ رَسُوْلَهٗ بِالْهُدٰى وَدِيْنِ الْحَقِّ لِيُظْهِرَهٗ عَلَى الدِّيْنِ كُلِّهٖ وَلَوْ كَرِهَ الْمُشْرِكُوْنَ ⑨

(९) त्यही हो जसले आफ्ना रसूल (सन्देष्टा) लाई मार्गदर्शन तथा सत्यधर्म प्रदान गरेर पठायो ताकि त्यसलाई अन्य सबै धर्महरुमाथि प्रभावशाली गरिदेओस्,[3] चाहे मूर्तिपूजक अप्रसन्न होऊन्।[4]

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا هَلْ اَدُلُّكُمْ عَلٰى تِجَارَةٍ تُنْجِيْكُمْ مِّنْ عَذَابٍ اَلِيْمٍ ⑩

(१०) हे ईमान भएकाहरु ! के म तिमीलाई त्यो व्यापार बताऊँ[5] जो तिमीलाई कष्टदायी यातनाबाट बचाओस् ?

تُؤْمِنُوْنَ بِاللّٰهِ وَرَسُوْلِهٖ وَتُجَاهِدُوْنَ فِيْ سَبِيْلِ اللّٰهِ

(११) अल्लाह (तआला) माथि तथा त्यसका सन्देष्टामाथि ईमान स्वीकार गर तथा अल्लाहका मार्गमा

[1]प्रकाश (ज्योति) सित अभिप्राय पवित्र कुर्आन इस्लाम, मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमका तर्क तथा प्रमाण हुन्। "मुखले निभाइदिनु" को अर्थ ती व्यङ्ग तथा कटाक्ष हुन् जो उनका मुखबाट निस्कन्थे।

[2]अर्थात् त्यसलाई विश्वमा प्रसारित गर्नेवाला तथा अन्य धर्महरुमाथि प्रभुत्व प्रदान गर्नेवाला। तर्कहरुका आधारमा अथवा भौतिक प्रभुत्वको आधारमा अथवा दुवै प्रकारले।

[3]यो उपरोक्त कुरामाथि नै जोड दिएको छ। त्यसका महत्वका कारण त्यसलाई पुन: दोहोऱ्याइएको छ।

[4]तैपनि यो निश्चय भएर हुनेछ।

[5]यस कर्म (अर्थात् ईमान तथा जिहाद) लाई व्यापारसित व्यंजित गरे। यसकारण कि यसमा पनि यिनलाई व्यापारको जस्तो लाभ हुनेछ, तथा त्यो लाभ के हो ? स्वर्गमा प्रवेश तथा नरकबाट मुक्ति। यसभन्दा ठूलो लाभ अरु के होला ? यस कुरोलाई अर्को स्थानमा यसप्रकार वर्णन गरिएको छ।

﴿ إِنَّ اللَّهَ اشْتَرَىٰ مِنَ الْمُؤْمِنِينَ أَنفُسَهُمْ وَأَمْوَالَهُم بِأَنَّ لَهُمُ الْجَنَّةَ ﴾

"अल्लाहले मोमिनहरुसित उनका प्राण तथा मालहरुको सौदा स्वर्गका साटोमा गरिसकको छ।" (अत्तौबा-१११)

بِأَمْوَالِكُمْ وَأَنفُسِكُمْ ۚ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ تَعْلَمُونَ ﴿١١﴾

आफ्ना तन-मन-धनले धर्मयुद्ध गर, यो तिम्रा लागि सर्वोत्तम छ यदि तिमीमा ज्ञान छ ।

يَغْفِرْ لَكُمْ ذُنُوبَكُمْ وَيُدْخِلْكُمْ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ وَمَسَاكِنَ طَيِّبَةً فِي جَنَّاتِ عَدْنٍ ۚ ذَٰلِكَ الْفَوْزُ الْعَظِيمُ ﴿١٢﴾

(१२) (अल्लाह तआला) ले तिम्रा पाप क्षमा गरिदिनेछ तथा तिमीलाई ती स्वर्गहरुमा पुऱ्याउनेछ जसका मुनि सरिताहरु प्रवाहित हुनेछन् तथा (शुद्ध) स्वच्छ घरहरुमा जो 'अदन' का स्वर्गमा हुनेछन्, यो बहुत ठूलो सफलता हो ।

وَأُخْرَىٰ تُحِبُّونَهَا ۖ نَصْرٌ مِّنَ اللَّهِ وَفَتْحٌ قَرِيبٌ ۗ وَبَشِّرِ الْمُؤْمِنِينَ ﴿١٣﴾

(१३) तथा तिमीलाई एउटा अन्य (उपकार) पनि दिनेछ जसलाई तिमी चाहन्छौ, त्यो अल्लाहको सहायता तथा शीघ्र विजय हो,[1] र ईमानवालाहरुलाई शुभ-सूचना दिदेउ ।[2]

[1]अर्थात् जब तिमी त्यसका मार्गमा लड्नेछौ तथा त्यसका धर्मको सहायता गर्नेछौ त त्यसले पनि तिमीलाई विजय तथा सहायता प्रदान गर्नेछ ।

﴿إِن تَنصُرُوا اللَّهَ يَنصُرْكُمْ وَيُثَبِّتْ أَقْدَامَكُمْ﴾

"यदि तिमीले अल्लाह (का धर्म) को सहायता गर्नेछौ त त्यसले तिम्रो सहायता गर्नेछ तथा तिमीलाई अटल राख्नेछ ।" (सूर: मुहम्मद-७)

﴿وَلَيَنصُرَنَّ اللَّهُ مَن يَنصُرُهُ ۗ إِنَّ اللَّهَ لَقَوِيٌّ عَزِيزٌ﴾

"जसले अल्लाहको सहायता गर्नेछ, अल्लाहले पनि अवश्य त्यसको सहायता गर्नुहुनेछ ।" निःसन्देह अल्लाह तआला बडो शक्तिशाली एवं प्रभावशाली हुनुहुन्छ ।" (अल-हज्ज-४०)

आख़िरत (परलोक) का वरदानहरुको तुलनामा त्यसलाई समीपको विजय भन्यो । तथा यसबाट अभिप्राय मक्काको विजय हो, तथा केही ज्ञाताहरुले इरान तथा रोमका महान राज्यहरुमाथि मुसलमानहरुका प्रभुत्वलाई यसको चरितार्थ मानेका छन्, जो ख़िलाफते राशिदा (ख़लीफा काल) मा मुसलमानहरुलाई प्राप्त भयो ।

[2]स्वर्गको पनि मर्नुको पश्चात तथा विजय एवं सहायताको पनि संसारमा । प्रतिबन्ध यो हो कि ईमानवालाहरु ईमानको अभियाचना पूरा गरिराखून्

﴿وَأَنتُمُ الْأَعْلَوْنَ إِن كُنتُم مُّؤْمِنِينَ﴾

"तथा तिमीहरु नै प्रभावशाली रहनेछौ यदि तिमी ईमानवाला रहयौ ।" (आले-इमरान-१३९)

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ كُونُوٓا۟ أَنصَارَ ٱللَّهِ كَمَا قَالَ عِيسَى ٱبْنُ مَرْيَمَ لِلْحَوَارِيِّـۧنَ مَنْ أَنصَارِىٓ إِلَى ٱللَّهِ ۖ قَالَ ٱلْحَوَارِيُّونَ نَحْنُ أَنصَارُ ٱللَّهِ ۖ فَـَٔامَنَت طَّآئِفَةٌ مِّنۢ بَنِىٓ إِسْرَٰٓءِيلَ وَكَفَرَت طَّآئِفَةٌ ۖ فَأَيَّدْنَا ٱلَّذِينَ ءَامَنُوا۟ عَلَىٰ عَدُوِّهِمْ فَأَصْبَحُوا۟ ظَٰهِرِينَ ﴿١٤﴾

(१४) हे ईमान भएकाहरु ! तिमी अल्लाह (तआ़ला) को सहायता गर्नेहरु बनिहाल,[1] जुनप्रकार (आदरणीय) मरियमको पुत्र (आदरणीय) ईसाले हवारीहरु (मित्रहरु) सित भने कि को छ जो अल्लाहका मार्गमा मेरो सहयोगी बनोस् । (उनका) मित्रहरुले भने कि हामी अल्लाहका मार्गमा सहायक छौं,[2] त इस्राईलको सन्तानमध्ये एउटा गुटले त ईमान ल्यायो तथा एउटा गुटले कुफ्र गऱ्यो[3] त हामीले ईमानवालाहरुको उनका

[1]सबै स्थितिहरुमा आफ्ना वचन तथा कर्महरुकाद्वारा पनि तथा धन एवं प्राणकाद्वारा पनि । जहिले पनि, जुन समय पनि तथा जुन स्थितिमा पनि अल्लाह तथा त्यसका रसूल आफ्ना धर्मको सहायताका लागि पुकार्दछन् तिमी तुरुन्त उनको पुकारमा भन कि हामी उपस्थित छौं, जस्तो हवारीहरुले ईसाको पुकारमा भने ।

[2]अर्थात् हामी तपाईं सल्लल्लाहु अलैहि वसल्लमका यस धर्मका आमन्त्रण तथा प्रचारमा सहायक छौं, जसका प्रचार-प्रसारको आदेश अल्लाहले तपाईंलाई दिएको छ । यसैप्रकार रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम हज्जका दिनहरुमा भन्नुहुन्थ्यो कि "को छ जसले मलाई शरण दिन्छ ताकि म मानिसहरुसम्म अल्लाहको सन्देश पुऱ्याउन सकूँ । यसकारण कि कुरैशले मलाई सन्देश पुऱ्याउनुको दायित्व पूरा गर्न दिंदैनन्" यहाँसम्मकि मदीनाको औस तथा ख़जरज कबीलाहरुले उहाँ सल्लल्लाहु अलैहि व सल्लमको पुकार सुने उहाँका हातमा उनीहरुले बैअत् गरे तथा उहाँ सल्लल्लाहु अलैहि व सल्लमलाई सहायताको वचन दिए । उहाँसित यो पनि भने कि यदि तपाईं हिजरत (स्थानान्तरण) गरी मदीना आउनुहुन्छ भने हामीले तपाईंको रक्षाको दायित्व स्वीकार गर्दछौं । अतः जब उहाँ हिज़रत गरेर मदीना जानुभयो त वचनानुसार उनीहरुले उहाँको तथा उहाँका साथीहरुको भरमक्दूर सहायता गरे, यहाँसम्मकि अल्लाह तथा त्यसका रसूलले उनको नाम नै 'अन्सार' (सहायक) राखिदिनुभयो, तथा अब यो उनको विशेष नाम नै भएको छ ।
رضي الله عنهم و أرضاهم (इब्ने कसीर)

[3]यिनी यहूदी थिए जसले ईसा अलैहिस्सलामको नबूअत (दूतत्व) को इन्कार मात्र गरेनन् बरु उनीमाथि तथा उनकी आमामाथि लान्छना (आक्षेप) पनि लगाए । केही ज्ञाताहरु भन्छन् कि यो मतभेद तथा बिखराव त्यस समय भयो जब आदरणीय ईसालाई आकाशमा उचालियो । एउटाले भन्यो कि ईसाका रुपमा अल्लाह (प्रभु) नै धर्तीमा प्रकट भएको थियो (जस्तो सनातन धर्ममा ईशदूतहरुलाई अवतार मान्दछन्) अब त्यो पुनः आकाशमा गइहाल्यो । यो सम्प्रदायलाई 'याकूबिया' भनिन्छ । नस्तूरीया सम्प्रदायले भने कि उनी अल्लाहका पुत्र थिए, पिताले पुत्रलाई आकाशमा बोलायो । तेस्रोले भन्यो कि उनी अल्लाहका भक्त

शत्रुहरुका तुलनामा सहायता गर्‍यौं, त उनी विजयी भए ।[1]

## सूरतुल-जुमुअ:-६२

سُورَةُ الجُمُعَةِ

सूर: जुमुअ:* मदीनामा अवतरित भएको, यसमा एघार आयतहरु तथा दुई रुकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

يُسَبِّحُ لِلَّهِ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ الْمَلِكِ الْقُدُّوسِ الْعَزِيزِ الْحَكِيمِ ①

(१) आकाशहरु एवं धर्तीमा सबै कुरा अल्लाह (तआ़ला) को पवित्रताको वर्णन गर्दछन्, जो अधिपति अत्यन्त पवित्र (छ) प्रभावशाली (एवं) हिक्मतवाला छ ।

هُوَ الَّذِي بَعَثَ فِي الْأُمِّيِّينَ رَسُولًا مِّنْهُمْ يَتْلُو عَلَيْهِمْ آيَاتِهِ وَيُزَكِّيهِمْ

(२) त्यही हो जसले अशिक्षित मानिसहरुमा[2] उनैमध्येबाट एउटा सन्देष्टा पठायो, जो उनीहरुलाई त्यसका आयतहरु

तथा त्यसका सन्देष्टा थिए, यही सम्प्रदाय सही थियो ।

[1]अर्थात् नबी सल्लल्लाहु अलैहि व सल्लमलाई पठाएर हामीले यसै अन्तिम गिरोहको अन्यको अनृत गिरोहहरुका मुक़ाबिलामा सहायता गर्‍यौं । यही सही आस्था राख्ने समूहले नबी सल्लल्लाहु अलैहि व सल्लममा पनि ईमान स्वीकार गर्‍यो तथा हामीले यस्तो उनलाई प्रमाणहरुको आधारमा पनि सबै काफ़िरहरुमाथि प्रभुत्व प्रदान गर्‍यौं तथा शक्ति एवं राज्यका आधारमा पनि यस प्रभुत्वको अन्तिम प्रकटन पुन: त्यस समय हुनेछ जब प्रलयका निकट आदरणीय ईसा अलैहिस्सलाम पुन: उतर्नेछन्, जस्तो कि यस प्रभुत्व एवं अवतरणको स्पष्टीकरण सहीह हदीसहरुमा निरन्तरताका साथ उद्धृत छ ।

*नबी सल्लल्लाहु अलैहि व सल्लम जुमआको नमाज़मा सूर: जुमआ तथा मुनाफिकून् पढ्ने गर्नुहुन्थ्यो । (सहीह मुस्लिम, किताबुल जुमआ, बाबु मा युकरउ फी सलातिल जुमुआ) तैपनि यिनलाई जुमआको रातिमा ईशाको नमाज़मा पढ्नु सही रिवायतमा सिद्ध छैन । हो, एउटा क्षीण रिवायतमा यस्तो वर्णित छ । (लिसानुल मीज़ानले इब्ने हज़र तर्जुमा सईद बिन सम्माक बि हरब)

[2]أُمِّيِّينَ (उम्मीईन) सित अभिप्राय अरबवासी हुन् । जसको बहुसंख्यक अनपढ थियो । उनको विशेष चर्चाको यो अर्थ होइन कि उहाँको रिसालत (सन्देश) अरुहरुका लागि थिएन, किनकि प्रथम सम्बोधित तिनै थिए, अत: अल्लाहको उनीमाथि अधिक अनुग्रह थियो ।

وَيُعَلِّمُهُمُ الْكِتٰبَ وَالْحِكْمَةَ ۚ وَاِنْ كَانُوْا مِنْ قَبْلُ لَفِيْ ضَلٰلٍ مُّبِيْنٍ ۙ﴿٢﴾

पढेर सुनाउन्छ तथा उनलाई शुद्ध गर्दछ र उनलाई किताब एवं ज्ञान सिकाउँछ । निःसन्देह उनी त्यसबाट पूर्व स्पष्ट विचलनमा थिए ।

وَّاٰخَرِيْنَ مِنْهُمْ لَمَّا يَلْحَقُوْا بِهِمْ ۗ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿٣﴾

(३) तथा अरुहरुका लागि पनि उनैमध्येबाट जो अहिलेसम्म उनीहरुसित भेटेनन्,[1] तथा तिनै प्रभावशाली (एवं) हिक्मतवाला छ ।

ذٰلِكَ فَضْلُ اللّٰهِ يُؤْتِيْهِ مَنْ يَّشَآءُ ۗ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ﴿٤﴾

(४) यो अल्लाहको कृपा हो[2] जसलाई चाहन्छ आफ्नो कृपा प्रदान गर्दछ तथा अल्लाह (तआ़ला) अत्यन्त कृपालु छ ।

مَثَلُ الَّذِيْنَ حُمِّلُوا التَّوْرٰىةَ ثُمَّ لَمْ يَحْمِلُوْهَا كَمَثَلِ الْحِمَارِ يَحْمِلُ اَسْفَارًا ۗ بِئْسَ مَثَلُ الْقَوْمِ الَّذِيْنَ

(५) जुन मानिसहरुलाई तौरातका (अनुसार) कार्य गर्नुको आदेश दिइयो अनि उनीहरुले त्यसमाथि कार्य गरेनन्, उनको उदाहरण त्यस गधा जस्तो छ जो धेरै किताब लादेको होस् ।[3]



[1]यो उम्मेईनको संयोजक हो अर्थात् بَعَثَ فِي آخَرِينَ مِنْهُمْ मा यो दोस्रोबाट ईरानी तथा अरबका अतिरिक्त अन्य देशहरुका मानिस हुन् जो प्रलयसम्म उहाँ सल्लल्लाहु अलैहि व सल्लममाथि ईमान स्वीकार गर्नेछैनन् । यसकारण यसमा इरानी, रोमी, बरबर, सुडानी, तुर्क, मङ्गोल, चाइनिज तथा भारतीय आदि सबै आउँछन् । अर्थात् उहाँ सल्लल्लाहु अलैहि वसल्लम सबका नबी (सन्देष्टा) हुन् तथा सबैले उहाँमाथि ईमान स्वीकार गरे र इस्लाम ल्याउनुका पश्चात यो पनि مِنْهُمْ को चरितार्थ अर्थात् प्रथम इस्लाम ल्याउने उम्मीहरुमध्ये भए, किनकि समस्त मुसलमान उम्मते वाहिदा (एक समूह) हुन् । यसै सर्वनामको कारण केही ज्ञाताहरु भन्छन् कि आख़रीन (अरुहरु) सित अभिप्राय पछि हुनेवाला अवसरवादी हुन्, किनकि مِنْهُمْ मा सर्वनाम उम्मीईनतिर फर्किराखेको छ । (फ़तहुल क़दीर)

[2]यो संकेत मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमको नबूअत (ईशदूत हुनेकुरा) तिर पनि हुनसक्छ तथा त्यसमाथि ईमान स्वीकार गर्नेहरुतिर पनि ।

[3] أَسْفَارٌ (अस्फ़ार) سِفْرٌ (सिफ़र) को बहुवचन हो । अर्थ हो महाग्रन्थ । किताब जब पढिन्छ त मानिस त्यसका अर्थहरुमा यात्रा गर्दछ । अतः किताबलाई पनि सफ़र (यात्रा) भनिन्छ । (फ़तहुल क़दीर) यो निष्कर्म यहूदीहरुको उदाहरण दिइएको हो कि जुनप्रकार गधालाई ज्ञान हुँदैन कि त्यसमाथि जुन पुस्तकहरु लादिएका छन् उनीहरुमा के लेखिएको छ ? वा त्यसमामाथि पुस्तकहरु लादिएका छन् अथवा फोहोरमैला । यसैप्रकार यी यहूदी हुन् । यिनी तौरात त लिई हिंड्छन्, त्यसलाई पढने तथा याद गर्ने कुरा पनि गर्दछन्, तर त्यसलाई न बुझ्दछन् न त्यसका

كَذَّبُوا بِآيَاتِ اللَّهِ ۚ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ⑤

अल्लाहका कुराहरूलाई झुठ्लाउनेहरूको निकै नराम्रो उदाहरण छ । तथा अल्लाह यस्ता अत्याचारीहरूलाई मार्गदर्शन दिंदैन ।

قُلْ يَا أَيُّهَا الَّذِينَ هَادُوا إِن زَعَمْتُمْ أَنَّكُمْ أَوْلِيَاءُ لِلَّهِ مِن دُونِ النَّاسِ فَتَمَنَّوُا الْمَوْتَ إِن كُنتُمْ صَادِقِينَ ⑥

(६) भनिदिनुस् कि हे यहूदीहरू ! यदि तिम्रो दावा छ कि तिमी अल्लाहका मित्र हौ अन्य मानिसहरूका अतिरिक्त,[1] त तिमी मृत्युको कामना गर[2] यदि तिमी साँचो हौ ।[3]

وَلَا يَتَمَنَّوْنَهُ أَبَدًا بِمَا قَدَّمَتْ أَيْدِيهِمْ ۚ وَاللَّهُ عَلِيمٌ بِالظَّالِمِينَ ⑦

(७) यिनले मृत्युको कामना कदापि गर्ने छैन ती कर्महरूका कारण जो आफ्नो हातद्वारा आफ्ना पूर्व पठाएका छन् ।[4] तथा अल्लाह (तआ़ला)

आदेशानुसार कर्म गर्दछन्, बरु त्यसमा परिवर्तन तथा कष्ट कल्पनाले काम लिन्छन् । यसैकारण वास्तवमा यिनी गधाभन्दा पनि नराम्रा छन्, किनकि गधा त जन्मजात समझ-बुझबाट रित्तो हुन्छ, जबकि उनीभित्र सुक्ष-बुझ त छ परन्तु उनीहरूले उचित रुपमा यसको प्रयोग गर्दैनन् । यसैकारण अन्य स्थानमा अल्लाह तआलाले भन्यो : ﴿أُولَٰئِكَ كَالْأَنْعَامِ بَلْ هُمْ أَضَلُّ﴾

"यिनी चौपायाका समान छन् बरु उनीभन्दा पनि अधिक विपथ ।" (अल-आराफ-१७९)

यही उदाहरण ती मुसलमानहरूको विशेष रुपले विद्वानहरूको छ, जो कुर्आन पढ्छन् तथा याद गर्दछन् तथा त्यसका अर्थ एवं भावार्थलाई बुझ्दछन्, किन्तु त्यसको अभियाचना (माँग) पूरा गर्दैनन् ।

[1]जस्तो उनीहरूले भन्ने गर्दथे, "हामी अल्लाहका पुत्र एवं त्यसका चहीते (प्रिय) हौं ।" (अल-मायद:- १८) तथा दावा गर्दथे, "स्वर्गमा केवल त्यही जानेछ जो यहूदी तथा इसाई हुनेछ ।" (अल-बक़र:-१११)

[2]ताकि तिमीलाई त्यो मान-मर्यादा प्राप्त होस् जो तिम्रो कल्पना अनुसार तिमीलाई प्राप्त हुनुपर्छ ।

[3] किनकि जसलाई ज्ञान छ कि मर्नुका पश्चात उसका लागि स्वर्ग छ, त्यो त त्यहाँ शीघ्र पुग्नुको इच्छुक हुन्छ । हाफ़िज़ इब्ने कसीरले यसको व्याख्या "दावते मुबाहला" सित गर्नुभएको छ । अर्थात् यसमा उनीसित भनिएको छ कि तिमी मुहम्मदलाई ईशदूत (नबी) हुने कुरोबाट इन्कार गर्दछौ तथा अल्लाहलाई प्रिय एवं मित्र हुनुका आफ्ना दावीमा साँचो हौ भने मुसलमानका साथ मिलेर अल्लाहसित प्रार्थना गरिहाल कि जो हामीमध्ये झुठा छ त्यसमाथि अल्लाहको धिक्कार होस् अथवा जो हामी दुबैमध्ये दुबै झूठा होस् अल्लाहले त्यसलाई मृत्यु दिदेओस् । (हेनुर्स सूर: बक़र: ९४ को व्याख्या)

[4]अर्थात् कुफ्र एवं अवज्ञा तथा अल्लाहको किताबमा जो हेरफेर तथा परिवर्तन यिनै गर्दै

अत्याचारीहरूलाई राम्ररी जान्दछ ।

قُلْ إِنَّ الْمَوْتَ الَّذِي تَفِرُّونَ مِنْهُ فَإِنَّهُ مُلَاقِيكُمْ ثُمَّ تُرَدُّونَ إِلَىٰ عَالِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَيُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ۝٨

(८) भनिदिनुस् कि जुन मृत्युबाट तिमी भागिराखेका छौ त्यो त तिमीसम्म अवश्य पुग्नेछ, अनि तिमी सबै गुप्त तथा स्पष्ट कुराहरूलाई जान्नेवाला (अल्लाह) तिर फर्काइनेछौ तथा त्यस पश्चात त्यसले तिमीलाई तिमीबाट गरिएका समस्त कर्महरूलाई भनिदिनेछ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا نُودِيَ لِلصَّلَاةِ مِن يَوْمِ الْجُمُعَةِ فَاسْعَوْا إِلَىٰ ذِكْرِ اللَّهِ وَذَرُوا الْبَيْعَ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ تَعْلَمُونَ ۝٩

(९) हे ती मानिसहरू जो इमान स्वीकार गरेका छौ ? जुमआका दिन (शुक्रबार) नमाजको अजान दिइन्छ भने तिमी अल्लाहको स्मरणतिर शीघ्र आइहाल्ने गर तथा क्रय-विक्रय छोडिदेउ ।[1] यो तिम्रो पक्षमा अति उत्तम छ यदि तिमी जान्दछौ ।

---

रहेका छन्, उनका कारण कहिल्यै पनि यिनी मृत्युको कामना गर्नेछैनन् ।

[1]यो 'अज़ान' कसरी दिइयोस् तथा यसका शब्द के होउन ? यो कुर्आनमा कही छैन । हो, हदीसमा वर्णित छ, जसबाट ज्ञात भयो कि कुर्आन बिना हदीस बुझ्नु सम्भव छ न त्यसमाथि कार्यरत हुनु नै । जुमअःलाई जुमअः यसकारण भन्दछन् कि त्यसदिन अल्लाहले प्रत्येक सृष्टिलाई पैदा गरेर सृजन कार्यबाट सावकाश भएको थियो । यस्तो मानौं त्यस दिन पूरा सृष्टि एकत्र भयो, अथवा नमाजका लागि मानिस एकत्र हुन्छन् । यसै आधारमा भनिन्छ । (फ़तहुल कदीर) فاسعوا को अर्थ यो होइन कि दगुरेर आऊ, बरु यो हो कि अज़ानका पश्चात तुरुन्त आइहाल तथा कारोबार बन्द गरिदेऊ, किनकि नमाजका लागि दगुरेर आउनु निषेध छ । शान्ति तथा मर्यादाका साथ आउनु माथि जोड दिइएको छ । (सहीह बुखारी, किताबुल अज़ान तथा मुस्लिम, किताबुल मसाजिद) अज़ानसित दोस्रो अज़ान तात्पर्य छ, किनकि नबी सल्लल्लाहु अलैहि व सल्लमका युगमा केवल एउटै अज़ान हुन्थ्यो जब उहाँ सल्लल्लाहु अलैहि व सल्लम मिम्बरमाथि बस्नुहुन्थ्यो । (फ़तहुल क़दीर) । यसकारण एउटै अज़ानमाथि अन्त गर्नु उत्तम छ । केही मानिसहरूले ذروا البيع (क्रय-विक्रय छाडिदेउ) सित यो तर्क निकालेछन् कि जुमआ मात्र नगरहरूमा फ़र्ज़ (अनिवार्य) छ, देहातीहरू (गाउँलेहरु) माथि जुमआ छैन, किनकि व्यापार तथा क्रय-विक्रय नगरहरूमै हुन्छ, देहातहरूमा हुँदैन । जबकि संसारको कुनै गाउँ यस्तो छैन जहाँ क्रय-विक्रय हुँदैन । अतः यो दावा नै तथ्यका प्रतिकूल छ । अर्को कुरो, क्रय-विक्रय तथा व्यापारको अर्थ सांसारिक कारोबार हो, ती जस्तासुकै होउन् जुनप्रकारका पनि होउन् । अज़ानका पश्चात तिनलाई छाडिदेओस् । केही देहातीहरूका सांसारिक कार्य हुँदैनन् ? के खेतीबारी व्यवसाय तथा सांसारिक कार्यभन्दा भिन्न छन्?

فَإِذَا قُضِيَتِ الصَّلَوٰةُ فَانتَشِرُوا فِي الْأَرْضِ وَابْتَغُوا مِن فَضْلِ اللَّهِ وَاذْكُرُوا اللَّهَ كَثِيرًا لَّعَلَّكُمْ تُفْلِحُونَ ⑩

(१०) अनि जब नमाज़ भइसक्छ त धर्तीमा फैलिहाल तथा अल्लाहका कृपालाई खोज[१], तथा अल्लाहको अत्याधिक वर्णन गर ताकि तिमीलाई सफलता प्राप्त होस् ।

وَإِذَا رَأَوْا تِجَارَةً أَوْ لَهْوًا انفَضُّوا إِلَيْهَا وَتَرَكُوكَ قَائِمًا ۚ قُلْ مَا عِندَ اللَّهِ خَيْرٌ مِّنَ اللَّهْوِ وَمِنَ التِّجَارَةِ ۚ وَاللَّهُ خَيْرُ الرَّازِقِينَ ⑪

(११) तथा जब कुनै सौदा बिक्री भएको देख्छन् अथवा कुनै तमासा देखापर्छ त त्यतातिर दौडिन्छन् तथा तपाईंलाई उभेकै अवस्थामा छाडिदिन्छन् ।[२] (तपाईं) भनिदिनुस् कि अल्लाहका पास जे-जति छ[३] त्यो खेल एवं व्यापारभन्दा उत्तम छ[४], तथा अल्लाह (तआला) सर्वोत्तम जीविका प्रदान गर्नेवाला छ ।[५]

[१]यसबाट तात्पर्य कारोबार तथा व्यापार हो । अर्थात् जुमआको नमाज पढेर पुनः आफ्ना काम-धन्दामा लागिहाल । उद्देश्य यो बताउनु हो कि जुमआका दिन कारोबार बन्द राख्नुको आवश्यकता छैन । मात्र नमाजका समय यस्तो गर्नु आवश्यक छ ।

[२]एकपटक नबी सल्लल्लाहु अलैहि व सल्लम जुमआको खुत्बा (भाषण) वर्णन गरिरहनु भएको थियो कि त्यतिखेरै एउटा काफ़िला आइपुग्यो, मानिसहरूलाई थाहा भयो त खुतबा छाडेर बाहिर क्रय-विक्रयका लागि हिंडिदिए कि कही विक्रय गर्ने वस्तु समाप्त नहोउन् । केवल बाह्र मानिस मस्जिदमा शेष रहे, जसमा यो आयत अवतरित भयो (सहीह बुख़ारी, तफ़सीर सूरः जुमआ, मुस्लिम, किताबुल जुमआ) انْفِضَاض को अर्थ हो, प्रवृत्त हुनु र ध्यान दिनु, दगुरेर फैलिहाल्नु । यहाँ केवल सर्वनाम व्यापारको वर्णन गरियो, यसकारण कि जब व्यापार पनि वैध र आवश्यक हुनका बावजूद खुत्बाका मध्ये अमान्य छ त खेल आदिका अमान्य हुनुमा के शंका हुनसक्छ ? यसका अतिरिक्त (क़ायेमन) बाट ज्ञात भयो कि जुम्आको खुत्बा (भाषण, प्रवचन) उभेर दिनु सुन्नत छ । जस्तो कि हदीसमा वर्णित छ कि उहाँका दुई खुत्वा हुन्थे, जसका मध्ये उहाँ सल्लल्लाहु अलैहि व सल्लम बस्नु हुन्थ्यो, कुर्आन पढ्नुहुन्थ्यो र मानिसहरूलाई शिक्षा एवं उपदेश (वाज़ो नसीहत) दिनुहुन्थ्यो । (मुस्लिम, किताबुल जुमुअः)

[३]अर्थात् अल्लाह तथा रसूलका अहकाम (आदेश) को पालना गरियोस् जो महान पुण्य हो ।

[४]जसतिर तिमी दौडेर गयौ र मस्जिदबाट निस्कियौ र खुतबये जुमआलाई सुन्दै सुनेनौ ।

[५]बस त्यसैबाट रोज़ी (जीविका) माँग र आज्ञापालनकाद्वारा उसैतिर वसीला (माध्यम) समात । उसको आज्ञाकारीता (अताअत) र उसैतिर, जीविका प्राप्तिको बहुत ठूलो साधन हो ।

# सूरतुल-मुनाफ़िकून-६३

سُوْرَةُ الْمُنٰفِقُوْنَ

सूरः मुनाफ़िकून मदीनामा अवतरित भएको, यसमा एघार आयतहरू तथा दुई रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

إِذَا جَآءَكَ الْمُنٰفِقُوْنَ قَالُوْا نَشْهَدُ إِنَّكَ لَرَسُوْلُ اللّٰهِ ۘ وَاللّٰهُ يَعْلَمُ إِنَّكَ لَرَسُوْلُهٗ ؕ وَاللّٰهُ يَشْهَدُ إِنَّ الْمُنٰفِقِيْنَ لَكٰذِبُوْنَ ۚ﴿۱﴾

(१) तिम्रो पासमा जब मुनाफ़िक आउँछन् त भन्दछन् कि हामी यस कुराका साक्षी छौं कि निःसन्देह तपाईं अल्लाहका सन्देष्टा हुनुहुन्छ[१], तथा अल्लाह (तआला) जान्दछ कि तपाईं अवश्य त्यसका सन्देष्टा हुनुहुन्छ[२], तथा अल्लाह साक्ष्य दिन्छ कि मुनाफ़िक् निश्चित रुपमा झूठा छन् ।[३]

اِتَّخَذُوْٓا أَيْمَانَهُمْ جُنَّةً فَصَدُّوْا عَنْ سَبِيْلِ اللّٰهِ ؕ إِنَّهُمْ سَآءَ مَا كَانُوْا يَعْمَلُوْنَ ﴿۲﴾

(२) उनीहरूले आफ्ना सौगन्धहरूलाई ढाल बनाएका छन्[४] त अल्लाहका मार्गबाट रोकिए ।[५] निःसन्देह नराम्रो छ त्यो कार्य जसलाई यिनीहरूले गरिराखेका छन् ।

---

[१]मुनाफ़िकूनसित अभिप्राय अब्दुल्लाह बिन उबैय तथा त्यसका साथी हुन् । यिनीहरू जब नबी सल्लल्लाहु अलैहि व सल्लमका सेवामा उपस्थित हुन्थे त कसमहरू खाइ-खाइ भन्थे कि तपाईं सल्लल्लाहु अलैहि व सल्लम अल्लाहका रसूल हुनुहुन्छ ।

[२]यो मध्यवर्ती वाक्य हो जो पहिलाका विषयमा जोड दिनका लागि छ, जसलाई मुनाफिक (द्वयवादी) द्वयवाद (निफ़ाक़) स्वरुप व्यक्त गर्दथे । अल्लाह तआलाले भन्नुभयो : यी त त्यसै मुखले बोल्दछन्, यिनका हृदय विश्वासबाट रिक्त छन्, परन्तु हामी जान्दछौं कि तपाईं सल्लल्लाहु अलैहि व सल्लम वास्तवमा अल्लाहका रसूल (सन्देष्टा) हुनुहुन्छ ।

[३]यस कुरामा कि उनी हृदयले तपाईंको रिसालत (दूतत्व) को साक्ष्य दिन्छन् । अर्थात् हृदयले साक्ष्य दिँदैनन् । मात्र जिब्रोले धोखा दिनका लागि भन्दछन् ।

[४]अर्थात् उनी सौगन्ध खाएर जे भन्दछन् कि उनी तिमीजस्तो मुसलमान हुन् तथा यो कि मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) अल्लाहका सन्देशवाहक हुन्, उनीहरूले आफ्नो सौगन्धलाई ढाल बनाएका छन् जसद्वारा उनी तिमीबाट पन्छिरहन्छन् तथा काफ़िरहरूको जस्तै यिनी तिम्रो तलवारहरूको मारमा आउँदैनन् ।

[५]दोस्रो अनुवाद यो हो कि यिनले शंका तथा संदेह पैदा गरेर अल्लाहका मार्गबाट रोके ।

ذٰلِكَ بِأَنَّهُمْ اٰمَنُوْا ثُمَّ كَفَرُوْا فَطُبِعَ عَلٰى قُلُوْبِهِمْ فَهُمْ لَا يَفْقَهُوْنَ ③

(३) यो यसकारणले छ कि यिनी ईमान स्वीकार गरी पुन: काफ़िर भइहाले[1], त उनका हृदयमा मोहर (छाप) लगाइयो । अब यिनी बुझ्दैनन् ।

وَاِذَا رَاَيْتَهُمْ تُعْجِبُكَ اَجْسَامُهُمْ ؕ وَاِنْ يَّقُوْلُوْا تَسْمَعْ لِقَوْلِهِمْ ؕ كَاَنَّهُمْ خُشُبٌ مُّسَنَّدَةٌ ؕ يَحْسَبُوْنَ كُلَّ صَيْحَةٍ عَلَيْهِمْ ؕ هُمُ الْعَدُوُّ فَاحْذَرْهُمْ ؕ قٰتَلَهُمُ اللّٰهُ ؗ اَنّٰى يُؤْفَكُوْنَ ④

(४) तथा जब तपाईंले उनीहरूलाई देख्नुहुन्छ त उनका शरीर तपाईंलाई आकर्षित प्रतीत हुन्छन्,[2] र जब यिनी कुरा गर्न थाल्छन् त उनका कुरामा तपाईं (आफ्नो) कान थाप्नुस्[3], जस्तो कि यी कटीहरू हुन् भित्ताको सहाराले लगाइएका[4], (उनीहरू) प्रत्येक (उच्च) ध्वनिलाई आफ्ना विरुद्ध ठान्दछन् ।[5] तिनै वास्तविक शत्रु हुन्, तिनीहरूबाट बच । अल्लाहले उनीहरूलाई नाश गरोस् ! कहाँ फर्किजान्छन् ।

وَاِذَا قِيْلَ لَهُمْ تَعَالَوْا يَسْتَغْفِرْ لَكُمْ رَسُوْلُ اللّٰهِ لَوَّوْا رُءُوْسَهُمْ وَرَاَيْتَهُمْ يَصُدُّوْنَ وَهُمْ مُّسْتَكْبِرُوْنَ ⑤

(५) तथा जब उनीसित भनिन्छ कि आऊ तिम्रा लागि अल्लाहका सन्देष्टाले क्षमा-याचना गर्नुहुन्छ, त आफ्ना टाउका फर्काइहाल्छन्[6], तथा तपाईंले उनीहरूलाई देख्नुहुन्छ कि उनीहरू गर्वगर्दै रोकिन्छन् ।[7]

---

[1]यसबाट ज्ञान भयो कि अवसरवादी (मुनाफ़िक़) पनि स्पष्ट काफ़िर हुन् ।

[2]अर्थात् उनका सौन्दर्य तथा शोभा एवं मनोहरताका कारण ।

[3]अर्थात् भाषाको स्वच्छता तथा प्रभावका कारण ।

[4]अर्थात् आफ्ना आकार-प्रकार तथा शोभा, मनोहरता, निर्बोधता तथा भलाईको कमीमा यस्ता छन् जस्तै भित्तामा लगाइएका केटीहरू, जो देख्नमा त राम्री लाग्दछन् किन्तु कसैलाई लाभ पुऱ्याउन सक्दैनन् । अथवा यो विधेय हो तथा यसको विषय लुप्त छ र अभिप्राय यो हो कि यिनी रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमको सभामा यसरी बस्दछन् जस्तो भित्तासित लागेका केटीहरू हुन्, जो कुनै कुरा बुझ्दैनन् न जान्दछन् । (फतहुल कदीर)

[5]अर्थात् यस्ता कायर छन् कि कुनै उच्च कुरा सुन्दछन् त ठान्दछन् कि हामीमाथि कुनै आपदा उत्रेको छ अथवा आत्तिन्छन् कि हाम्रो विरुद्ध कुनै कारवाही त भएको छैन, जस्तै चोर तथा विश्वासघातीको हृदय भित्रबाट ढुकढुक गर्दछ ।

[6]अर्थात् क्षमा माँग्नुबाट मुख फर्काउँदै आफ्ना टाउकालाई फर्काउन्छन् ।

[7]अर्थात् भन्नेवालाको कुराबाट मुख फर्काउनेछन् अथवा रसूलुल्लाह सल्लल्लाहु अलैहि

سَوَآءٌ عَلَيۡهِمۡ اَسۡتَغۡفَرۡتَ لَهُمۡ اَمۡ لَمۡ تَسۡتَغۡفِرۡ لَهُمۡ ؕ لَنۡ يَّغۡفِرَ اللّٰهُ لَهُمۡ ؕ اِنَّ اللّٰهَ لَا يَهۡدِى الۡقَوۡمَ الۡفٰسِقِيۡنَ ۝٦

(६) उनका पक्षमा तपाईंबाट क्षमाको प्रार्थना गर्नु तथा नगर्नु दुवै समान छ[1] अल्लाह (तआला) ले उनलाई कदापि क्षमा गर्नेछैन ।[2] निःसन्देह अल्लाह (तआला) यस्ता अवज्ञाकारीहरूलाई मार्ग देखाउँदैन ।

هُمُ الَّذِيۡنَ يَقُوۡلُوۡنَ لَا تُنۡفِقُوۡا عَلٰى مَنۡ عِنۡدَ رَسُوۡلِ اللّٰهِ حَتّٰى يَنۡفَضُّوۡا ؕ وَلِلّٰهِ خَزَآئِنُ السَّمٰوٰتِ وَالۡاَرۡضِ وَلٰكِنَّ الۡمُنٰفِقِيۡنَ

(७) यही तिनीहरू हुन् जो भन्दछन् कि जो मानिस अल्लाहका सन्देष्टाका पास छन्, उनीमाथि केही खर्च नगर, यहाँसम्मकि उनीहरू यताउता भइहालून्[3], र आकाशहरू तथा धर्तीका समस्त कोष अल्लाहकै स्वामित्वमा छ[4] परन्तु यिनी

व सल्लामबाट मुख फर्काउनेछन्

[1]आफ्ना निफ़ाक़ (अवसरवाद) मा दुराग्रह तथा कुफ्रमा निरन्तरताका कारण उनी यस्ता स्थानमा पुगेका छन् जहा उनका क्षमयाचना गर्नु तथा नगर्नु दुवै बराबर छ।

[2]यदि यसै निफ़ाक़को दशामा मरेका छन् भने उनका लागि क्षमा छैन। हो, यदि उनी जीवनमा कुफ्र तथा निफ़ाक़बाट तौबा (प्रायश्चित) गर्दछन् भने अर्कै कुरा हो, अनि उनका लागि क्षमा सम्भव छ।

[3]एउटा ग़जवा यस्तो युद्धलाई भनिन्छ जसमा मुहम्मद सल्लल्लाहु अलेहि व सल्लम उपस्थित हुनुहुन्थ्यो जसलाई इतिहासकारहरूलाई मुरैसीअ अथवा बनुल मुस्तलिक भनेका छन्) एउट मोहाजिर तथा एउटा अंसारका बीच झगडा भइहाल्यो। दुवैले आ-आफ्ना सहायताका लागि अंसार तथा मुहाजिरीनलाई पुकारे, जसपश्चात अब्दुल्लाह बिन उबैय (मुनाफ़िक) ले अंसारसित भने कि तिमीले मुहाजिरहरूको सहायता गऱ्यौ तथा उनलाई आफ्ना साथ राख्यौ, अब हेरिहाल कि यसको परिणाम अगाडि आइराखेछ, अर्थात् अब यो तिम्रै खाएर तिमीमाथि रिस पोखिराखेका छन्। उनको उपचार त यो हो कि उनीमाथि खर्च गर्न बन्द गरिदेउ, यिनी स्वयं तितर-बितर भइहाल्नेछन्। उसले यो पनि भन्यो कि हामी (जो सम्मानित छौं) यी अपमानितहरू (मुहाजिरहरू) लाई मदीनाबाट निकाल्दिने छौं। आदरणीय ज़ैद पुत्र अरकम रज़ीयल्लाहु अन्हुले यो अपशब्द सुनिहाले तथा उनले आएर रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमलाई भन्नुभयो। उहाँले अब्दुल्लाह बिन उबैयलाई बोलाएर सोध्नुभयो त उसले साफ इन्कार गरिदियो जसपश्चात ज़ैद बिन अरक़मलाई बडो दुःख भयो। अल्लाहले ज़ैद बिन अरक़मको सच्चाईलाई व्यक्त गर्नका लागि "सूरः मुनाफ़िकून" उतार्नु भयो जसमा अब्दुल्लाह बिन उबैय का दुष्कर्मलाई उजागर गरिएको छ। (सहीह बुख़ारी, तफ़सीर सूरः मुनाफ़िकून)

[4]अर्थ यो हो कि मोहाजिरीनको अन्नदाता परमेश्वर हो, यसकारण कि जीविकाका कोष उसैसित छ। त्यसले जसलाई जति चाहन्छ देओस् तथा जसलाई चाहन्छ रोकोस्।

لَا يَفْقَهُونَ ۝٧

मुनाफ़िक़हरु बुझ्दैनन् ।[1]

يَقُولُونَ لَئِن رَّجَعْنَآ إِلَى ٱلْمَدِينَةِ لَيُخْرِجَنَّ ٱلْأَعَزُّ مِنْهَا ٱلْأَذَلَّ ۚ وَلِلَّهِ ٱلْعِزَّةُ وَلِرَسُولِهِۦ وَلِلْمُؤْمِنِينَ وَلَٰكِنَّ ٱلْمُنَٰفِقِينَ لَا يَعْلَمُونَ ۝٨

(८) यिनी भन्दछन् कि हामी अब फर्केर मदीना जानेछौं भने सम्मानवाला त्यहाँबाट अपमानवालालाई निकालिदिनेछ ।[2] (सुन !) सम्मान त केवल अल्लाह (तआ़ला) का लागि तथा त्यसका सन्देष्टाका लागि एवं ईमान भएकाहरूका लागि छ[3] परन्तु यी द्वयवादी (मुनाफ़िक़िन) जान्दैनन् ।[4]

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ لَا تُلْهِكُمْ أَمْوَٰلُكُمْ وَلَآ أَوْلَٰدُكُمْ عَن ذِكْرِ ٱللَّهِ ۚ وَمَن يَفْعَلْ ذَٰلِكَ

(९) हे ईमान भएकाहरू ! तिम्रो धन तथा तिम्रो सन्तानले तिमीलाई सल्लाहको यादबाट निश्चिन्त नगरिदेऊन् ।[5] तथा जो यस्तो गर्दछन् उनी ठुलै हानि

[1]मुनाफ़िक़ (अवसरवादी) यस तथ्यलाई जान्दैनन्, यसकारण उनी ठान्दछन् कि अंसार यदि मोहाजिरीनतिर सहायतार्थ हात बढाएनन् भने उनी भोकै मर्नेछन् ।

[2]यो भन्ने मानिस मुनाफ़िक़हरूको प्रमुख अब्दुल्लाह बिन उबैय थियो । सम्मानितबाट त्यसको प्रयोजन थियो त्यो स्वयं तथा त्यसका साथी तथा अपमानितबाट (अल्लाहको शरण !) रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम तथा मुसलमान ।

[3]अर्थात् सम्मान तथा प्रभुत्व केवल अल्लाहका लागि छ, त्यो आफ्नो तर्फबाट जसलाई चाहन्छ सम्मान तथा प्रभुत्व प्रदान गर्दछ । जस्तो कि त्यो आफ्ना रसूलहरू तथा उनीमाथि ईमान स्वीकार गर्नेहरूलाई सम्मान तथा सफलताहरू प्रदान गर्दछ, न कि उनलाई जो अवज्ञाकारी छन् । यहाँ मुनाफ़िक़हरूका कथनको खण्डन गरेको छ कि मुसलमानहरूको स्वामी केवल अल्लाह ताआला छ तथा सम्मानित पनि त्यही छ जसलाई त्यो सम्मानित ठान्दछ, न कि त्यो जो स्वयंलाई सम्मानित तथा जसलाई जगतवासीले सम्मानित सम्झोस् । अल्लाहका निकट सम्मानित मात्र तथा मात्र ईमान भएकाहरू हुनेछन्, काफ़िर तथा मुनाफ़िक होइनन् ।

[4]यसकारण यस्ता कर्म गर्दैनन् जो उनका लागि लाभप्रद छन्, न ती कुराहरूबाट बाँच्छन् जो उनका लागि हानिकार छ ।

[5]अर्थात् माला तथा सन्तानको प्रेम तिमीमाथि यदि प्रभावी नहुनजाओस् कि तिमी अल्लाहद्वारा भनिएका आदेश तथा कर्तव्यबाट निश्चिन्त हुनजाऊ तथा अल्लाहद्वारा निर्धारित गरिएका हलाल (वैध) तथा हराम (अवैध) का सीमाहरूको चिन्ता नगर । मुनाफ़िक़हरूको चर्चाका पश्चात तुरुन्त यस चेतावनीको आशय यो हो कि यी मुनाफ़िक़हरूको आचरण हो, जो मनुष्यलाई क्षतिमा पारिदिनेवाला छ । ईमान भएकाहरूको आचरण यस विपरीत हुन्छ तथा त्यो यो हो कि उनी प्रत्येक क्षण अल्लाहलाई याद गर्दछन्, अर्थात् त्यसका आदर्शहरू एवं अनिवार्यताहरुको पालन

فَأُولَٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ⑩

व्यहोर्ने मानिसहरू हुन् ।

وَاَنْفِقُوْا مِنْ مَّا رَزَقْنٰكُمْ مِّنْ قَبْلِ اَنْ يَّاْتِيَ اَحَدَكُمُ الْمَوْتُ فَيَقُوْلَ رَبِّ لَوْلَآ اَخَّرْتَنِيْٓ اِلٰٓى اَجَلٍ قَرِيْبٍ ۙ فَاَصَّدَّقَ وَ اَكُنْ مِّنَ الصّٰلِحِيْنَ ⑪

(१०) तथा जे-जति हामीले तिमीलाई प्रदान गरेका छौं, त्यसमध्येबाट (हाम्रा मार्गमा) त्यसभन्दा पूर्व खर्च गर[1] कि तिमीमध्ये कसैलाई मृत्यु आइपुगोस्, त भन्नालागे कि हे मेरा प्रभु ! मलाई तिमीले अलिबेरको छुट किन दिँदैनौ ?[2] कि म दान दिउँ तथा सदाचारीहरूमध्ये हुनजाऊँ ।

وَلَنْ يُّؤَخِّرَ اللّٰهُ نَفْسًا اِذَا جَآءَ اَجَلُهَا ۚ وَاللّٰهُ خَبِيْرٌۢ بِمَا تَعْمَلُوْنَ ⑪

(११) तथा कसैको जब निर्धारित समय आइपुग्छ त्यसपछि उसलाई अल्लाह (तआला) ले कदापि अवसर दिँदैन तथा जे-जति तिमी गर्दछौ, त्यससित अल्लाह (तआला) राम्ररी अवगत छ ।

## सूरतुत-तग़ाबुन- ६४

سُوْرَةُ التَّغَابُنِ

सूरः तग़ाबुन मदीनामा अवतरित भएको तथा यसमा अठार आयतहरू एवं दुई रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

يُسَبِّحُ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۚ لَهُ الْمُلْكُ

(१) आकाशहरू तथा धर्तीको प्रत्येक वस्तुले अल्लाहको पवित्रताको वर्णन गर्दछन्,[3] उसैको तथा वैध एवं अवैधमा अन्तर गर्दछन् ।

[1]खर्च गर्नुको अभिप्राय ज़कात दिनु तथा अन्य राम्रा कार्यहरूमा खर्च गर्नु हो ।

[2]यसबाट ज्ञात भयो कि ज़कात (धर्मदान) दिने तथा अल्लाहका मार्गमा खर्च गर्ने तथा यसैप्रकार यदि हज गर्ने सामर्थ्य छ भने त्यसलाई अदा गर्नु (तिर्नु) मा ढिलो गर्नु हुँदैन, यसकारण थाहा छैन कि मृत्यु कहिले आइपुगोस् तथा यो अनिवार्य कर्तव्य त्यसमाथि रहिरहोस् । मृत्युका समय कामना गर्नुको कुनै लाभ हुनेछैन ।

[3]अर्थात् आकाश एवं धर्तीको प्रत्येक वस्तु सबै दोष तथा कमीबाट अल्लाहको पवित्रता एवं शुद्धताको वर्णन गर्दछ, आफ्नो स्थितिले पनि तथा कथनले पनि, जस्तो कि पहिला गुज्रिसकेको छ ।

وَلَهُ الْحَمْدُ ۚ وَهُوَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ①

राज्य छ तथा उसैको प्रशंसा छ[1] तथा त्यो प्रत्येक वस्तुमाथि सामर्थ्यवान छ ।

هُوَ الَّذِي خَلَقَكُمْ فَمِنْكُمْ كَافِرٌ وَمِنْكُمْ مُؤْمِنٌ ۚ وَاللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ②

(२) उसैले तिमीलाई पैदा गरेको छ, त तिमीमध्ये केही त काफ़िर छन् तथा केही ईमान भएकाहरू छन्, तथा जे-जति तिमी गरिराखेका छौ अल्लाह (तआला) राम्ररी देखिराखेको छ ।[2]

خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ بِالْحَقِّ وَصَوَّرَكُمْ فَأَحْسَنَ صُوَرَكُمْ ۖ

(३) उसैले आकाशहरू तथा धर्तीलाई न्याय (औचित्य तथा हिक्मत) ले उत्पन्न गऱ्यो,[3] उसैले तिम्रा रुप बनाए[4] र अनि

[1]अर्थात् यी दुबै गुण उसैका साथ विशेष छन् । यदि कसैलाई केही अधिकार प्राप्त छ भने त्यो उसैबाट प्रदान गरेको छ, जो सामयिक छ, कसैसित सुन्दरता तथा निपुणता छ त त्यसै दयाको स्रोतको परिणाम हो । अतः वास्तविक प्रशंसाको अधिकारी केवल त्यही छ ।

[2]अर्थात् मानिसका लागि पुण्य, पाप, भलाई, पाप तथा कुफ्र एवं ईमानका मार्गहरूलाई स्पष्ट गर्नुका पश्चात अल्लाहले मानिसलाई इच्छा तथा रुचिको अधिकार दियो, जसका अनुसार कसैले कुफ्र तथा कसैले ईमानको मार्ग अपनाएको छ, उसले कसैमाथि दबाव दिएको छैन । यदि त्यसले दबाव दिन्थ्यो भने कोही कुफ्र तथा पापको मार्ग अपनाउनमा समर्थ हुने थिएन । परन्तु यसप्रकारले मानिसको परीक्षा सम्भव थिएन, जबकि अल्लाहको इच्छा मानिसको परीक्षा लिनु थियो ।

﴿الَّذِي خَلَقَ الْمَوْتَ وَالْحَيَاةَ لِيَبْلُوَكُمْ أَيُّكُمْ أَحْسَنُ عَمَلًا﴾

"जसले मृत्यु तथा जीवनलाई यसकारण पैदा गऱ्यो कि तिम्रो परीक्षा लेओस् कि तिमीमध्येबाट सत्कर्म कसले गर्दछ ।" (सूरतुल मुल्क-२)

यस आधारमा जस्तो काफ़िरको रचयिता अल्लाह हो कुफ्र पनि उसैको रचना हो, किन्तु यो कुफ्र त्यस काफ़िरको कर्म तथा कमाई हो जसले आफ्नो इच्छाले त्यसलाई अपनाएको छ, यसैप्रकार मोमिन तथा ईमानको स्रष्टा पनि अल्लाह हो परन्तु ईमान त्यस मोमिनको कमाई तथा कर्म हो जसले त्यसलाई अपनाएको छ । यस कमाई तथा कर्मका लागि दुवैलाई उनका कर्महरूका अनुसार फल प्राप्त हुनेछ, किनकि त्यसले सबैका कर्म देखिराखेको छ ।

[3]तथा त्यो न्याय एवं हिक्मत यही हो कि उपकारीलाई त्यसको प्रत्युपकार तथा अपकारीलाई त्यसको प्रत्यापकार देओस्, जस्तो कि यस न्यायको पूर्ण प्रबन्ध त्यसले क़्यामतका दिन गर्नेछ ।

[4]तिम्रो रुप, आकार-प्रकार तथा आकृति अति सुन्दर बनायो जसबाट अल्लाहको अरु

وَإِلَيْهِ الْمَصِيرُ ③

सुन्दर बनायो तथा उसैतिर फर्कनुछ ।[१]

يَعْلَمُ مَا فِي السَّمٰوٰتِ وَالْأَرْضِ وَيَعْلَمُ مَا تُسِرُّوْنَ وَمَا تُعْلِنُوْنَ ۗ وَاللّٰهُ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ④

(४) त्यसले आकाशहरू एवं धर्तीका समस्त वस्तुहरूको ज्ञान राख्दछ तथा जे-जति तिमी गुप्त राख्दछौ तथा जो प्रकट गर्दछौ त्यो (सबैलाई) जान्दछ। अल्लाह त छातिभित्र सम्मका कुराहरूको ज्ञाता छ ।[२]

اَلَمْ يَأْتِكُمْ نَبَؤُا الَّذِيْنَ كَفَرُوْا مِنْ قَبْلُ ۚ فَذَاقُوْا وَبَالَ اَمْرِهِمْ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ⑤

(५) के तिम्रो पासमा यसभन्दा पूर्वका काफ़िरहरूको सूचना पुगेन, जसले आफ्ना कर्महरूका परिणामको स्वाद चाखे[३] तथा जसका लागि कष्टदायी यातना छ ?[४]

ذٰلِكَ بِاَنَّهٗ كَانَتْ تَّاْتِيْهِمْ

(६) यो यसकारण कि उनका पासमा उनका सन्देष्टाले

---

सृष्टि बञ्चित छ, जस्तो अर्को स्थानमा भन्नुभयो :

﴿يَا أَيُّهَا الْإِنسَانُ مَا غَرَّكَ بِرَبِّكَ الْكَرِيمِ * الَّذِي خَلَقَكَ فَسَوَّاكَ فَعَدَلَكَ * فِي أَيِّ صُورَةٍ مَّا شَاءَ رَكَّبَكَ﴾

"हे मनुष्यहरू ! तिमीलाई आफ्ना कृपाशील प्रभुबाट कुन कुराले बहकायो ? जुन प्रभुले तिमीलाई जन्म दियो, अनि ठीक-ठाक गऱ्यो, त्यस पश्चात (सन्तुलित एवं) बराबर बनायो, जुन रुपमा चाह्यो तिमीलाई जोड दियो ।" (सूरतुल इन्फितार-६-८)

﴿وَصَوَّرَكُمْ فَأَحْسَنَ صُوَرَكُمْ وَرَزَقَكُم مِّنَ الطَّيِّبَاتِ﴾

"तथा तिम्रा रुप बनाएर निकै सुन्दर बनाए तथा तिमीलाई उत्तम (एवं पवित्र) वस्तुहरू खानलाई प्रदान गरे ।" (सूरतुल मोमीन ६४)

[१]कुनै अरुतिर होइन, कि अल्लाहका हिसाब तथा पकडबाट बचाव हुनजाओस् ।

[२]अर्थात् त्यसको ज्ञान पृथ्वी तथा आकाशको सृष्टि सबै कुराहरूमाथि आच्छादित छ, बरु त्यो अन्तर्यामी छ । यसभन्दा पहिला जुन वाचा तथा धम्कीहरू वर्णित भएका छन् यो उनैमाथि जोड दिएको छ ।

[३]यो मक्कावासीहरू सित विशेष रुपले तथा अरबका काफ़िरहरूसित सामान्यत: सम्बोधन छ । पहिला काफ़िरहरूसित अभिप्राय नूहको जाति, आद जाति तथा समूद जाति आदि हुन्, जसलाई संसारमा उनका कुफ्र तथा अवज्ञाका कारण प्रकोपमा हालेर नष्ट, ध्वस्त गरिदिइयो ।

[४]अर्थात् सांसारिक यातनाका अतिरिक्त परलोकमा ।

[५]ذلك यो संकेत हो त्यस यातनातिर जो संसारमा उनले पाए तथा आखिरत (परलोक) मा पनि पाउनेछन् ।

رُسُلُهُمْ بِالْبَيِّنٰتِ فَقَالُوْٓا اَبَشَرٌ يَّهْدُوْنَنَا ز فَكَفَرُوْا وَ تَوَلَّوْا وَّاسْتَغْنَى اللّٰهُ ط وَاللّٰهُ غَنِيٌّ حَمِيْدٌ ⑥

स्पष्ट प्रमाण (चमत्कार) लिएर आए त उनीहरूले भनिदिए कि के मानवले हाम्रो पथप्रदर्शन गर्नेछ ?[१] त इन्कार गरिदिए[२] तथा मुख फर्काइहाले[३] तथा अल्लाहले पनि निश्चिन्तता गऱ्यो[४] तथा अल्लाह त छ नै अत्याधिक निस्पृह[५] समस्त गुणहरू भएको ।[६]

زَعَمَ الَّذِيْنَ كَفَرُوْٓا اَنْ لَّنْ يُّبْعَثُوْا ط قُلْ بَلٰى وَرَبِّيْ لَتُبْعَثُنَّ ثُمَّ لَتُنَبَّؤُنَّ بِمَا عَمِلْتُمْ ط

(७) ती काफ़िरहरूले भ्रम गरेका छन् कि पुन: जीवित गरिने छैनन्,[७] तपाईं भनिदिनुस् कि किन होइन, अल्लाहको सौगन्ध तिमी अवश्य पुन: जीवित गरिने छौ[८], अनि जे-जति

[१]यो उनका कुफ़्रका कारण हो कि उनीहरूले यो कुफ़्र, जो दुबै लोकमा उनको यातनाको कारण बन्यो यसकारण अपनाए कि उनीहरूले एउटा मानव पुरुषलाई आफ्नो मार्गदर्शक मान्नबाट इन्कार गरिदिए । अर्थात् एउटा मानिस सन्देष्टा बनेर मानिसहरूका मार्गदर्शन तथा पथप्रदर्शनका लागि आउनु उनका लागि अस्वीकार्य थियो जस्तो कि आज पनि बिदअतीहरूका लागि रसूललाई मानव पुरुष मान्न अति भारी एवं कठिन छ । هَدَاهُمُ الله تعالى

[२]जस्तो कि यसै आधारमा उनीहरूले रसूलहरूलाई रसूल मान्न तथा उनीमा यी ईमान स्वीकार गर्नुबाट इन्कार गरिदिए ।

[३]अर्थात् उनीबाट मुख फर्काईहाल्यो तथा जो निमन्त्रण उनी दिन्थे त्यसमाथि चिन्तन-मनन् नै गरेनन् ।

[४]अर्थात् उनका ईमान तथा उनको इबादत (बन्दना) बाट ।

[५]उसलाई कसैको इबादतबाट के लाभ तथा त्यसको इबादतबाट इन्कार गर्नबाट के हानि ?

[६]अथवा महमूद हो (प्रशंसित) सबै सृष्टितिरबाट, अर्थात् प्रत्येक सृष्टि आफ्नो स्थिति तथा कथनको जिब्रोले त्यसको प्रशंसामा मग्न छ ।

[७]अर्थात् यो आस्था कि केयामतका दिन पुन: जीवित गरिने छैन, यो काफ़िरहरूको केवल भ्रम हो, जसको कुनै प्रमाण छैन । भ्रम झूठका लागि पनि उपर्युक्त हुन्छ ।

[८]पवित्र कुर्आनका तीन स्थानमा अल्लाहले आफ्ना रसूललाई यो आदेश दिएको छ कि अल्लाहको शपथ लिएर यो घोषणा गर कि अल्लाहले अवश्य पुन: जीवन प्रदान गर्नेछ । तिनीमध्ये एउटा यो स्थान हो तथा यसभन्दा पहिला एक स्थान सूर: यूनुस आयत ५३ एवं दोस्रो सूर: सबा आयत ३ हो ।

وَ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرٌ ۝٧

तिमीले दिएका छौ त्यसको सूचना दिइने छौ ।[1] तथा अल्लाहका लागि यो निकै सरल छ ।[2]

فَاٰمِنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ وَالنُّوْرِ الَّذِيْٓ اَنْزَلْنَا ۭ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ۝٨

(८) तसर्थ तिमी अल्लाहमाथि तथा त्यसका सन्देष्टामाथि[3] तथा त्यस ज्योतिमाथि जसलाई हामीले अवतरित गरेका छौं ईमान स्वीकार गर[4], तथा अल्लाह ताआला तिम्रा प्रत्येक कर्मसित अवगत छ ।

يَوْمَ يَجْمَعُكُمْ لِيَوْمِ الْجَمْعِ ذٰلِكَ

(९) जुन दिन तिमी सबैलाई त्यस एकत्रित हुने दिन[5] एकत्रित गर्नेछ, त्यही दिन हो पराजय

[1]यो केयामत हुनुको रहस्य हो कि अन्ततः अल्लाहले किन सबै मानिसलाई पुनः जीवन प्रदान गर्नेछ ? यसकारण ताकि प्रत्येकलाई त्यसका कर्मको पूरा प्रतिकार (प्रतिफल) दिइयोस्, किनकि संसारमा हामीले देख्छौं कि यो प्रतिफल साधारणतः पूर्ण रुपले पाइँदैन, राम्रालाई र नराम्रालाई । अब यदि केयामतका दिन पनि पूर्ण प्रतिफलको व्यवस्था हुँदैन भने संसार एउटा खेलाडीको खेल तथा व्यर्थ कर्म नै मानिनेछ, जबकि अल्लाह यस्ता कुराहरूबाट अति उच्च (महान) छ । त्यसको कुनै कार्य व्यर्थ छैन । यो कुरा त टाढै छ कि जिन्न तथा मानिसहरूको उत्पत्तिलाई एउटा क्रिडा ठानियोस् ।

[2]यो पुनः जीवन मानिसहरूलाई जति नै कठिन लागोस्, किन्तु अल्लाहका लागि अत्यन्त सरल छ ।

[3] فَآمِنُوا मा 'फा' विवरण (स्पष्ट गर्न) का लागि छ जो लुप्त शब्दको संकेत दिन्छ, अर्थात् إذا كانَ الأَمْرُ هكـذا فصَدِّقُوا بالله अर्थात् "जब मामिला यस्तो छ जो वर्णित भयो, त अल्लाहमाथि तथा त्यसका रसूलमाथि ईमान स्वीकार गर, त्यसको पुष्टि गर ।"

[4]तपाईं सल्लल्लाहु अलैहि व सल्लमका साथ अवतरित यो कुरआन नै प्रकाश हो, जसबाट मार्ग विचलनका अन्धकार हटेर जान्छ तथा ईमानको प्रकाश फैलन्छ ।

[5]केयामतलाई यौमुल जमअ (एकत्रित हुने दिन) यसकारण भनिन्छ कि त्यस दिन आदि, अन्त्यका सबै मानिस एउटै मैदानमा एकत्रित हुनेछन् । फरिश्ताले पुकार्नेछ त सबैले त्यसको पुकार सुन्नेछन् । प्रत्येकको दृष्टि अन्तसम्म पुग्नेछ, किनकि बीचमा कुनै वस्तु क्षेत्रको रुपमा आउने छैन । जस्तो अन्य स्थानमा अल्लाहले भन्नुभयो :

﴿ قُلْ إِنَّ الْأَوَّلِينَ وَالْآخِرِينَ ۝ لَمَجْمُوعُونَ إِلَىٰ مِيقَاتِ يَوْمٍ مَعْلُومٍ ﴾

"तपाईं (सल्लल्लाहु अलैहि व सल्लम) सबै अघिल्ला प्रथा पछिल्ला अवश्य एकत्र गरिनेछन् । एउटा निर्धारित दिनका समय ।" (अल-वाक़ेअः-४९, ५०)

يَوْمُ التَّغَابُنِ ۗ وَمَنْ يُّؤْمِنْ بِاللّٰهِ وَيَعْمَلْ صَالِحًا يُّكَفِّرْ عَنْهُ سَيِّاٰتِهٖ وَيُدْخِلْهُ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۗ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ۝٩

तथा विजयको ।[1] तथा जुन व्यक्तिले अल्लाहमाथि ईमान स्वीकार गरी सत्कर्म गर्दछ, अल्लाहले त्यसबाट त्यसका पापहरू हटाइदिनेछ तथा त्यसलाई स्वर्गहरूमा लग्नेछ जसका मुनि सरिताहरू प्रवाहित छन्, जसमा उनीहरू सधैं रहनेछन् । यही बहुत ठूलो सफलता हो ।

وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَآ اُولٰٓئِكَ اَصْحٰبُ النَّارِ خٰلِدِيْنَ فِيْهَا ۗ وَبِئْسَ الْمَصِيْرُ ۝١٠

(१०) तथा जुन मानिसहरूले कुफ्र गरे र हाम्रा आयतहरूलाई उनी सबै नरकमा जाने हुन्छन्, जसमा उनीहरू सधैं रहनेछन्, त्यो साह्रै नराम्रो स्थान हो ।

مَآ اَصَابَ مِنْ مُّصِيْبَةٍ اِلَّا بِاِذْنِ اللّٰهِ ۗ وَمَنْ يُّؤْمِنْ بِاللّٰهِ يَهْدِ قَلْبَهٗ ۗ وَاللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ۝١١

(११) कुनै आपदा अल्लाहको आज्ञा बिना पुग्न सक्दैन ।[2] तथा जसले अल्लाहमाथि ईमान स्वीकार गर्दछ अल्लाह त्यसका हृदयलाई मार्गदर्शन प्रदान गर्दछ[3] तथा अल्लाह प्रत्येक वस्तु

[1]अर्थात् एक समूहले जित्नेछ तथा अर्कोले हार्नेछ । सबभन्दा ठूलो विजय ईमानवालाहरूलाई यो प्राप्त हुनेछ कि उनी स्वर्गमा प्रवेश गर्नेछन् तथा त्यहाँ ती घरहरूका पनि अधिकारी बन्नेछन् जो नरकवासीहरूका लागि थिए । यदि उनीहरूले नरकमा जाने कर्म गर्दैनथे । त सबभन्दा ठूलो पराजय नरकवासीहरूका भागमा आउनेछ जो नरकमा जानेछन्, जसले राम्रोलाई नराम्रोसित, उत्तमलाई तुच्छसित एवं वरदानहरूलाई यातनासित साटे । 'गबन' को अर्थ हानि तथा क्षति पनि हो अर्थात् घाटाको दिन । त्यसदिन काफ़िरहरूलाई त घाटाको संवेदन हुने नै छ । ईमान भएकाहरूलाई पनि यस आधारमा घाटा अनुभव हुनेछ कि उनीहरूले र अझै अधिक पुण्यका काम गरेर अधिक पद किन प्राप्त गरेनन् ।

[2]अर्थात् त्यसका भाग्य-लेख तथा इच्छाबाट नै त्यसको उत्पत्ति हुन्छ । केही विद्वानहरू भन्छन् कि यो अवतरित हुनुको कारण काफ़िरहरूको यो कथन हो कि यदि मुसलमान सत्यमा भएको भए तउनीहरूलाई सांसारिक आपदाहरू पुग्ने थिएनन् । (फ़तहुल क़दीर)

[3]अर्थात् त्यो जानिहाल्थ्यो कि जे-जति त्यसलाई पुग्दछ अल्लाहका इच्छाले नै पुग्दछ, अतः त्यो धैर्य तथा भाग्यमा प्रसन्नता व्यक्त गर्दछ । इब्ने अब्बास रज़ीयल्लाहु अन्हुमा भन्नुहुन्छ कि त्यसका हृदयमा पक्का विश्वास गरिदिन्छ जसबाट त्यो जान्दछ कि त्यसलाई पुग्ने कुरो त्यसबाट चुक्न सक्दैन तथा जुन चुक्ने कुरा छ त्यसलाई पुग्न सक्दैन । (इब्ने कसीर)

लाई राम्ररी जान्दछ ।

وَ اَطِيْعُوا اللّٰهَ وَ اَطِيْعُوا الرَّسُوْلَ ۚ فَاِنْ تَوَلَّيْتُمْ فَاِنَّمَا عَلٰى رَسُوْلِنَا الْبَلٰغُ الْمُبِيْنُ ⑫

(१२) (मानिसहरू !) अल्लाहका आदेशको पालन गर तथा सन्देष्टाका आदेशको पालना गर । अनि यदि तिमी विमुख भयौ भने हाम्रो सन्देष्टाको दायित्व केवल स्पष्टरुपले पुऱ्याइदिनु हो ।[1]

اَللّٰهُ لَاۤ اِلٰهَ اِلَّا هُوَ ۗ وَ عَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ⑬

(१३) अल्लाहको अतिरिक्त कुनै सत्य उपास्य छैन तथा ईमान भएकाहरू केवल अल्लाहमाथि नै भरोसा राख्नु पर्दछ ।[2]

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اِنَّ مِنْ اَزْوَاجِكُمْ وَ اَوْلَادِكُمْ عَدُوًّا لَّكُمْ فَاحْذَرُوْهُمْ ۚ وَ اِنْ تَعْفُوْا وَ تَصْفَحُوْا وَ تَغْفِرُوْا فَاِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ⑭

(१४) हे ईमान भएकाहरू ! तिम्रा केही पत्नीहरू तथा केही सन्तानहरू तिम्रा शत्रु छन् ।[3] तसर्थ उनीहरूबाट सतर्क रहनु[4] तथा यदि तिमी क्षमा गरिदिन्छौ तथा छाडिदिन्छौ र क्षमा गरिदिन्छौ भने अल्लाह (तआला) क्षमा गर्ने कृपालु छ ।[5]

---

[1]अर्थात् हाम्रा रसूलको यसबाट केही बिग्रने छैन, किनकि त्यसको काम सन्देश पुऱ्याइदिनु हो । इमाम जुहरी भन्नुहुन्छ कि अल्लाहको काम रसूल पठाउनु हो, रसूलको काम सन्देश पुऱ्याइदिनु तथा मानिसहरूको काम स्वीकार गर्नु हो । (फ़तहुल क़दीर)

[2]अर्थात् सबै विषय अल्लाहलाई समर्पित गरुन्, उसैमाथि विश्वास गरुन् तथा केवल उसैसँग विनय गरुन्, किनकि त्यसका अतिरिक्त कोही कार्यक्षम एवं संकटहारी छैन ।

[3]अर्थात् जो तिमीलाई पुण्यका कामहरू तथा अल्लाहका आज्ञापालनबाट रोक्दछन्, बुझिहाल कि उनी तिम्रा हितकारी होइनन्, शत्रु हुन् ।

[4]अर्थात् उनका पछि लाग्नबाट बच, बरु उनीहरूलाई आफ्नो अनुगामी बनाउ ताकि उनीहरूले पनि अल्लाहको आज्ञाकारिता अपनाऊन, न कि तिमी त्यसका पछाडि लागेर आफ्नो आख़िरत बर्बाद गर ।

[5]यसका अवतरणका कारण यो भनिएको छ कि मक्कामा मुसलमान हुने केही मुसलमानहरूले मक्का छाडेर मदीना आउनुको विचार गरे, जस्तो कि त्यस समय हिजरतको आदेश बलपूर्वक दिइएको थियो, किन्तु उनका पत्नी तथा बच्चाहरू बाधा बने तथा उनीहरूले तिनीहरूलाई हिजरत गर्न दिएनन् । अनि जब पछि उनी रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमका पास आए त देखे कि

إِنَّمَآ أَمْوَٰلُكُمْ وَأَوْلَٰدُكُمْ فِتْنَةٌ ۚ وَٱللَّهُ عِندَهُۥٓ أَجْرٌ عَظِيمٌ ⑮

(१५) तिम्रा धन तथा तिम्रा सन्तान (त सर्वथा) तिम्रा परीक्षा हुन्,[1] तथा बहुत ठूलो प्रतिफल अल्लाहका पास छ ।[2]

فَٱتَّقُوا۟ ٱللَّهَ مَا ٱسْتَطَعْتُمْ وَٱسْمَعُوا۟ وَأَطِيعُوا۟ وَأَنفِقُوا۟ خَيْرًا لِّأَنفُسِكُمْ ۗ وَمَن يُوقَ شُحَّ نَفْسِهِۦ فَأُو۟لَٰٓئِكَ هُمُ ٱلْمُفْلِحُونَ ⑯

(१६) त जहाँसम्म तिमीबाट हुनसक्छ अल्लाहसित तर्सदै रह तथा सुन्दै एवं आज्ञापालन गर्दै हिंड[3] तथा (अल्लाहका मार्गमा) दान गर्दैरह जो तिम्रा लागि उत्तम छ,[4] तथा जो मानिस आफ्नो मनोकांक्षाबाट सुरक्षित राखिए तिनै सफल छन् ।

إِن تُقْرِضُوا۟ ٱللَّهَ قَرْضًا حَسَنًا يُضَٰعِفْهُ لَكُمْ وَيَغْفِرْ لَكُمْ ۚ

(१७) यदि तिमीले अल्लाहलाई उत्तम ऋण दिनेछौ (अर्थात् उसका मार्गमा खर्च गर्नेछौ)[5] त त्यसले त्यसलाई तिम्रा लागि बढाउँदै जानेछ तथा तिम्रा

---

उनीभन्दा पहिला आउनेहरूले धर्ममा अत्याधिक समझ प्राप्त गरिसकेका छन् त उनीहरूलाई आफ्ना पत्नी तथा बच्चाहरूमाथि क्रोध आयो, जसले उनलाई हिजरतबाट रोकेका थिए, अतः उनलाई दण्ड दिने कुरो सोचे । अल्लाहले यसमा उनीहरूलाई क्षमा गरिदिनु तथा छाडिदिनुको आदेश दियो । (तिर्मिज़ी, तफ़सीर सूर: तग़ाबुन)

[1]जो तिमीलाई निषेधित धन आर्जनका लागि उक्साउँछन् तथा अल्लाहको अधिकार पूरा गर्नबाट रोक्दछन्, त यस परीक्षामा तिमी त्यसै बेला सफल हुनसक्छौ जब तिमीले अल्लाहको अवज्ञामा उनको अनसशरण गर्दैनौ । अभिप्राय यो भयो कि धन तथा सन्तान जहाँ अल्लाहका वरदान छन्, त्यहीं उनी मानिसको परीक्षाका साधन पनि छन् । यस ढंगले अल्लाह देख्दछ कि मेरो आज्ञाकारी को छ तथा अवज्ञाकारी को ?

[2]अर्थात् त्यस व्यक्तिका लागि धन तथा सन्तानका प्रेमका मुक़ाबिलामा अल्लाहको आज्ञाकारितालाई प्रधानता दिन्छ तथा त्यसको अवज्ञाबाट पन्छिन्छ ।

[3]अर्थात् अल्लाह तथा रसूलका कुराहरूलाई ध्यानले सुन तथा त्यसका अनुसार कर्म गर, किनकि मात्र सुन्नु व्यर्थ छ जबसम्म त्यसको पालना नहोस् ।

[4]خَيْرًا (अर्थात्) إنفاقا خيرا अथवा يَكُنِ الإنفاقُ خيرا । खर्च साधारण छ, अनिवार्य दान तथा ऐच्छिक दान दुबैलाई सम्मिलित छ ।

[5]अर्थात् शुद्ध विचार तथा सफा मनले अल्लाहका मार्गमा खर्च गर्नेछौ ।

وَاللّٰهُ شَكُوْرٌ حَلِيْمٌ ﴿١٧﴾

पाप पनि क्षमा गरिदिनेछ र अल्लाह बडो गुणग्राहक तथा सहनशील छ ।[1]

عٰلِمُ الْغَيْبِ وَالشَّهَادَةِ الْعَزِيْزُ الْحَكِيْمُ ﴿١٨﴾

(१८) त्यो गुप्त एवं प्रकटलाई जान्दछ । शक्तिमान एवं हिक्मतवाला छ ।[2]

سُوْرَةُ الطَّلَاقِ

## सूरतुत्तलाक़-६५

सूरः तलाक मदीनामा अवतरित भएको, यसमा बारह आयतहरू एवं दुई रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं कृपालु छ ।

يٰٓاَيُّهَا النَّبِيُّ اِذَا طَلَّقْتُمُ النِّسَآءَ فَطَلِّقُوْهُنَّ لِعِدَّتِهِنَّ وَاَحْصُوا الْعِدَّةَ ۚ وَاتَّقُوا اللّٰهَ رَبَّكُمْ ۚ

(१) हे नबी ! (आफ्ना अनुयायीहरूसित भन) जब तिमी आफ्ना पत्नीहरूलाई तलाक़ दिन चाहन्छौ[3] त उनको इद्दत (अवधिका आरम्भ) मा उनीहरूलाई तलाक़ देउ[4] तथा इद्दतको गणना

---

[1]अर्थात् कैयन् गुना बढाउनुका साथ त्यसले तिम्रा पाप पनि क्षमा गरिदिनेछ ।

[2]त्यसबेला आफ्ना आज्ञापालकहरूलाई कैयन गुना पुण्य तथा प्रतिफल प्रदान गर्दछ । तथा अवज्ञाकारीहरूलाई तुरुन्त समात्दैन ।

[3]नबी सल्लल्लाहु अलैहि व सल्लमसित सम्बोधन उहाँको श्रेष्ठता प्रतिष्ठाका कारण हो । अन्यथा आदेश त अनुयायीहरूलाई दिइराखिएको छ । अथवा उहाँलाई नै विशेष रुपले सम्बोधित गरिएको छ तथा बहुवचनको रुप प्रतिष्ठाका कारण छ तथा अनुयायीहरूका लागि उहाँको आदर्श नै पर्याप्त छ । طَلَّقْتُمْ को अर्थ हो जब तलाक़ दिनुको पक्का इरादा गरेका हुन्छौ ।

[4]यसमा तलाक़ दिनुको विधि तथा समय भनिएको छ र لِعِدَّتِهِنَّ मा 'लाम' समय निर्धारणका लागि अर्थात् لِاسْتِقْبَالِ عِدَّتِهِنَّ (इद्दतका आरम्भमा) तलाक देउ । अर्थात् जब स्त्री मासिक धर्मबाट पवित्र हुन्छे त त्यससित संभोग नगरिकन तलाक देऊ । पवित्रताको अवस्था त्यसको इद्दत (अवधि) को आरम्भ हो । यसको अभिप्राय यो हो कि मासिक धर्मको अवस्थामा अथवा पवित्रताको अवस्थामा संभोगका पश्चात तलाक़ दिनु गलत छ । यसलाई धर्मविदहरूले तलाके बिदई (विधिका प्रतिकूल) तलाक़बाट तथा पहिला (सहीह) तरीकाको सुन्नत अनुसार तलाक़सित व्यंजित गरिएको छ । यसको समर्थन त्यस हदीसबाट हुन्छ जसमा वर्णित छ कि आदरणीय इब्ने उमरले मासिक धर्मको अवस्थामा आफ्नी पत्नीलाई

لَا تُخْرِجُوْهُنَّ مِنْۢ بُيُوْتِهِنَّ وَلَا يَخْرُجْنَ اِلَّاۤ اَنْ يَّاْتِيْنَ بِفَاحِشَةٍ مُّبَيِّنَةٍ ؕ وَ تِلْكَ حُدُوْدُ اللّٰهِ ؕ وَمَنْ يَّتَعَدَّ حُدُوْدَ اللّٰهِ فَقَدْ ظَلَمَ نَفْسَهٗ ؕ لَا تَدْرِيْ لَعَلَّ اللّٰهَ يُحْدِثُ بَعْدَ ذٰلِكَ اَمْرًا ①

राख[1] तथा अल्लाहसित जो तिम्रो प्रभु हो तर्सिरह, न तिमीले उनीहरूलाई उनका घरहरूबाट निकाल[2] तथा न उनी (स्वयं) निक्लून्[3], हो यो अर्कै कुरा हो कि उनी खुला कुकर्म गरिहालून् ।[4] यी अल्लाहका निर्धारित गरिएका सीमाहरू हुन्, र जबकि अल्लाहका सीमाहरूको उल्लंघन गर्दछ, उसले निश्चित रुपमा आफूमाथि अत्याचार गर्‍यो,[5] तिमी जान्दैनौ कि शायद त्यसका पश्चात अल्लाह (तआ़ला) ले कुनै

तलाक़ दिनुभयो त रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम क्रोधित भइहाल्नुभयो तथा उनलाई त्यसलाई वापस लिनुका साथ आदेश दिनुभयो कि पवित्रताको अवस्थामा तलाक़ दिनु, तथा त्यसका लागि उहाँले यस आयतलाई प्रमाण बनाउनुभयो । (सहीह बुख़ारी, किताबुत्तलाक़) यद्यपि मासिक धर्मको अवस्थामा दिइएको तलाक़ पनि बिदई हुनुको बावजुद पर्न जानेछ । मुहद्देसीन तथा सबै विद्वान यसलाई मान्दछन् । हो, इब्ने तैमीया तथा इब्ने क़यि्यम तलाक़ बिदयी पर्न मान्दैनन् । (विवरणका लागि हेर्नुस् नैलुलऔतार, किताबुत तलाक़, बाबुन नह्ये अनित तलाकि फ़िल हैज़े व फ़ित् तुहरे तथा अन्य हदीसहरुको व्याख्या)

[1]अर्थात् त्यसका आरम्भ तथा अन्तको ध्यान राख, ताकि स्त्रीले त्यसका पश्चात दोस्रो विवाह गर्न सकोस्, अथवा यदि तिमी नै पुन: राख्न चाहन्छौ (पहिलो तथा दोस्रो तलाक़को दशामा) त इद्दत (अवधि) भित्र पुन: राख्न सक ।

[2]अर्थात् तलाक़ दिनासाथै स्त्रीलाई आफ्ना घरबाट ननिकाल, बरु इद्दतसम्म त्यसलाई घरमै रहनदेऊ, तथा त्यस समयसम्म रहनु तथा खानु एवं लुगाफाटाको खर्च तिम्रो दायित्व हो ।

[3]अर्थात् इद्दत (अवधि) भित्र स्त्रीले स्वयं पनि बाहिर निस्कनबाट बचाव गरोस्, परन्तु यो कि कुनै अति आवश्यक समस्या होस् ।

[4]अर्थात् व्यभिचार गरोस् अथवा अपशब्द तथा असभ्य स्वभावको प्रदर्शन गरोस्, जसबाट घरवालाहरूलाई दु:ख होस् । दुबै स्थितिहरुमा त्यसलाई निकाल्न उचित (जायेज़) हुनेछ ।

[5]अर्थात् उपरोक्त आदेश अल्लाहका सीमाहरु हुन् जसको उल्लंघन स्वयं आफूमाथि अत्याचार गर्नु हो, किनकि त्यसको धार्मिक तथा सांसारिक हानि स्वयं उल्लंघनकारीले नै भोग्नुपर्नेछ ।

नयाँ कुरा उत्पन्न गरिदेओस् ।[1]

(२) त जब यी (महिलाहरू) आफ्ना अवधि पुरा गर्नका निकट पुग्दछन् त उनीहरूलाई नियमानुसार आफ्ना विवाहमा रहनदेउ अथवा नियमानुसार

فَإِذَا بَلَغْنَ أَجَلَهُنَّ فَأَمْسِكُوهُنَّ بِمَعْرُوفٍ أَوْ فَارِقُوهُنَّ بِمَعْرُوفٍ

[1]अर्थात् पतिका मनमा तलाक दिए कि स्त्रीको रुची पैदा गरिदेओस् तथा त्यो फेरिबाट राख्नमा तयार हुनजाओस्, जस्तो कि पहिलो तथा दोस्रो तलाक्का पश्चात पतिलाई अवधिभित्र पुन:बाट राख्नुको अधिकार छ । यसकारण केही भाष्यकारहरूको विचार छ कि अल्लाहले यस आयतमा मात्र एक तलाक् दिनुको शिक्षा दिएको छ तथा एक समयमा तीन तलाक् दिनबाट रोकेको छ, किनकि यदि उसले एकै समयमा तीन तलाक दिन्छ (तथा धर्मविधानले त्यसलाई वैध गरेर लागू पनि गरिदेओस्) त फेरि यो भन्नु व्यर्थ छ कि सम्भवत: अल्लाह तआलाले कुनै नयाँ कुरा पैदा गरिदेओस् । (फ़तहुल क़दीर) यसैबाट इमाम अहमद तथा अन्य विद्वानहरूले यो तर्क निकालेका छन् कि आवाज तथा खर्च दिनुमा जुन जोड दिइएको छ त्यो ती स्त्रीहरूका लागि हो जसलाई पतिले पहिलो तथा दोस्रो तलाक् दिएको हुन्छ, किनकि उनमा पतिलाई फेरिबाट राख्नुको अधिकार रहन्छ । तथा जुन स्त्रीलाई विभिन्न समयमा दुई तलाक् भइसकेको छ त तेस्रो तलाक् त्यसका लागि बत्ता अथवा बायेना (बिलगाव) हो । त्यसको आवास तथा खर्च पतिमाथि छैन । त्यसलाई तुरुन्त पतिका घरबाट दोस्रो ठाउँमा गरिदिइनेछ, किनकि अब पतिले त्यसलाई पुन: राखेर आफ्नो घर आबाद गर्न सक्दैन حَتَّىٰ تَنكِحَ زَوْجًا غَيْرَهُ यसकारण अब उसलाई पतिका पास रहनु तथा त्यसबाट खर्च लिनुको अधिकार छैन । यसको समर्थन फ़ातिमा बिन्ते कैसको यस घटनाबाट हुन्छ कि जब त्यसलाई त्यसका पतिले तेस्रो तलाक पनि दिइहाल्यो तथा त्यसलाई पतिका घरबाट निस्कन भनियो त त्यो तयार भइनन् । अन्तत: विवाद रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमसम्म पुग्यो । उहाँ सल्लल्लाहु अलैहि वसल्लमले यही निर्णय गर्नुभो कि त्यसका लागि आवास तथा खर्च छैन, त्यसलाई तुरुन्त अर्को ठाउँ गइहाल्नुपर्छ । केही रिवायत (उद्धरणहरू) मा स्पष्टीकरण पनि छ । «إِنَّمَا النَّفَقَةُ وَالسُّكْنَىٰ لِلْمَرْأَةِ، إِذَا كَانَ لِزَوْجِهَا عَلَيْهَا الرَّجْعَةُ» (रवाहु अहमद वन नसाई) हो, केही रिवायतमा गर्भवतीका लागि पनि आवास तथा खर्चको स्पष्टीकरण छ । (हेर्नुस् नैलुल औतार, बाबु माजाअ फी नफ़क़तिल मबतूतते) केही मानिस यी हदीसहरूलाई कुरआनका उपरोक्त आदेश لَا تُخْرِجُوهُنَّ مِن بُيُوتِهِنَّ का विपरीत मानेर यिनलाई मान्दैनन् जो सही छैन, किनकि कुरआनको ओदश आफ्ना अगाडि तथा पछाडिका संकेतहरूलाई हेर्दै मुतल्लका रजईया (जसलाई तलाक्का पश्चात पुन: राख्न सकियोस्) का लागि छ । यदि त्यसलाई साधारण पनि मानिन्छ भने त ती हदीसहरू त्यसलाई विशेष गर्नका लागि छन् अर्थात कुरआनका सामान्य आदेशलाई यी रिवायतहरूले मुतल्लका रजईयाका लागि विशेष गरिदियो तथा मुतल्लका बायेनालाई यस साधारण नियमबाट निकालदियो ।

وَّاَشْهِدُوْا ذَوَىْ عَدْلٍ مِّنْكُمْ وَاَقِيْمُوا الشَّهَادَةَ لِلّٰهِ ؕ ذٰلِكُمْ يُوْعَظُ بِهٖ مَنْ كَانَ يُؤْمِنُ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ ؕ وَمَنْ يَّتَّقِ اللّٰهَ يَجْعَلْ لَّهٗ مَخْرَجًا ۙ﴿۲﴾

तिनीहरूलाई अलग गरिदेउ[1] तथा आफूमध्येबाट दुई न्याय गर्ने व्यक्तिहरूलाई साक्षी बनाउ,[2] तथा अल्लाहको प्रसन्नताका लागि ठीक-ठाक (साँचो) साक्ष्य देउ ।[3] यही हो त्यो जसको शिक्षा उनीहरूलाई दिइन्छ, जो अल्लाहमाथि तथा केयामत (प्रलय) का दिनमाथि ईमान स्वीकार गर्दछ, तथा जो व्यक्ति अल्लाहसित तर्सन्छ अल्लाहले त्यसका लागि छुटकाराको मार्ग निकालिदिन्छ ।[4]

وَّيَرْزُقْهُ مِنْ حَيْثُ لَا يَحْتَسِبُ ؕ وَمَنْ يَّتَوَكَّلْ عَلَى اللّٰهِ فَهُوَ حَسْبُهٗ ؕ اِنَّ اللّٰهَ بَالِغُ اَمْرِهٖ ؕ قَدْ جَعَلَ اللّٰهُ لِكُلِّ شَىْءٍ قَدْرًا ﴿۳﴾

(३) तथा त्यसलाई यस्तो स्थानबाट जीविका उपलब्ध गराउँछ जसको उसलाई अनुमान पनि हुँदैन, तथा जुन व्यक्तिले अल्लाहमाथि भरोसा गर्नेछ, अल्लाह त्यसका लागि पर्याप्त हुनेछ । अल्लाह (तआला) आफ्नो कार्य पुरा गरेर नै रहनेछ,[5] अल्लाह (तआला) ले प्रत्येक वस्तुको एउटा अनुमान निर्धारित गरेको छ ।[6]

[1]मुतल्लाका मदखूला (जुन स्त्रीसँग पतिले संभोग गरेको छ यदि उसलाई तलाक् दिएको छ भने) त्यसको अवधि (इद्दत) तीन मासिक धर्म छ । यदि त्यसलाई फेरिबाट राखिहाल्नुको विचार छ भने इद्दत (अवधि) पूरा हुनुभन्दा अगावै रुजूअ् गरिहाल, अन्यथा उनीहरूलाई नियमानुसार आफूबाट अलग गरिदेऊ ।

[2]यस रजअत (पत्नीलाई पुन: राख्नु) माथि तथा केही धर्मविद्का निकट तलाक्मा साक्षी (गवाह) बनाइहाल । यो आदेश अनिवार्यताका लागि होइन, यस्तो गर्नु उत्तम छ, अर्थात् गवाह साक्षी बनाउनु उत्तम छ, आवश्यक छैन ।

[3]यो साक्ष्यहरूलाई भनिएको छ कि बिना पक्षपात तथा प्रलोभन सही-सही साक्ष्य देओस् ।

[4]कठिनाई तथा परीक्षाहरूबाट निस्कनुको मार्ग पैदा गरिदिन्छ ।

[5]अर्थात् त्यसले जे चाहन्छ, त्यसबाट कसैले रोक्न सक्दैन ।

[6]अभावहरूका लागि पनि तथा सुविधाहरूको लागि पनि यी दुवै आफ्ना समयमा समाप्त हुन जान्छन् । केही ज्ञाताहरूले यसको अभिप्राय मासिक धर्म तथा इद्दत (अवधि) लिएका छन् ।

وَالّٰٓـِٔيْ يَئِسْنَ مِنَ الْمَحِيْضِ مِنْ نِّسَآئِكُمْ اِنِ ارْتَبْتُمْ فَعِدَّتُهُنَّ ثَلٰثَةُ اَشْهُرٍ ۙ وَّالّٰٓـِٔيْ لَمْ يَحِضْنَ ؕ وَاُولَاتُ الْاَحْمَالِ اَجَلُهُنَّ اَنْ يَّضَعْنَ حَمْلَهُنَّ ؕ وَمَنْ يَّتَّقِ اللّٰهَ يَجْعَلْ لَّهٗ مِنْ اَمْرِهٖ يُسْرًا ④

(४) तिम्रा स्त्रीहरूमध्ये जुन स्त्रीहरू मासिक धर्मबाट निराश भइसकेका हुन्छन्, यदि तिमीलाई शंका छ भने तिनीहरूको अवधि तीन महिना छ तथा उनको पनि जसलाई अझै मासिक धर्म प्रारभ नै भएको छैन ।[1] तथा गर्भवती महिलाहरूको इद्दत (अवधि) तिनका शिशुहरूलाई जन्म दिनु हो तथा जो व्यक्ति अल्लाह तआलासित तर्सनेछ, अल्लाह त्यसका प्रत्येक (कार्यमा सुविधा उत्पन्न गरिदिनेछ ।

ذٰلِكَ اَمْرُ اللّٰهِ اَنْزَلَهٗۤ اِلَيْكُمْ ؕ وَمَنْ يَّتَّقِ اللّٰهَ يُكَفِّرْ عَنْهُ سَيِّاٰتِهٖ وَيُعْظِمْ لَهٗۤ اَجْرًا ⑤

(५) यो अल्लाहको आदेश हो जो उसले तिमीतिर उतारेको छ तथा जो व्यक्ति अल्लाहसित तर्सने छ अल्लाहले त्यसका पाप मेटाइदिनेछ तथा त्यसलाई निकै ठूलो प्रतिफल दिनेछ ।

اَسْكِنُوْهُنَّ مِنْ حَيْثُ سَكَنْتُمْ مِّنْ وُّجْدِكُمْ وَلَا تُضَآرُّوْهُنَّ

(६) तिमी आफ्नो शक्तिका अनुसार जहाँ रहन्छौ त्यहाँ ती (तलाक़वाली) महिलाहरूलाई राख[3] तथा उनीहरूलाई बाध्य गर्नका लागि कष्ट

[1]यो उनको इद्दत (अवधि) हो जसको मासिक धर्म अधिक आयुका कारण रोकियो अथवा जसलाई मासिक धर्म आउनु प्रारम्भ नै भएन । ज्ञातव्य छ कि यस्तो कहिलेकाहीं हुन्छ कि स्त्री ठूलो भएर पतिका साथ रहन्छे परन्तु त्यसलाई मासिक धर्म हुँदैन ।

[2]मुतल्लक़ा (तलाक प्राप्त स्त्री) यदि गर्भवती छे भने त्यसको अवधि प्रसव हो, चाहे अर्को दिन नै प्रसव हुन जाओस् । यसका अतिरिक्त आयतबाट प्रत्यक्ष यही छ कि प्रत्येक गर्भवतीको यही इद्दत छ चाहे त्यो तलाक प्राप्त होस् अथवा त्यसको पतिको निधन भएको होस्, हदीसहरूबाट पनि यसलाई समर्थन प्राप्त हुन्छ (हेर्नुहोस् सहीह बुख़ारी, मुस्लिम तथा दोस्रो सुनन, किताबुत्तलाक़) अन्य स्त्रीहरू जसका पति मरेर जान्छन् उनको अवधि चार महिना दश दिन छ। (सूर: बक़र: २३४)

[3]मुतल्लका रजइयालाई (अर्थात् दुई तलाक़सम्म जसमा पत्नीलाई अवधिभर फेरिबाट राख्न सक्दछ) यसकारण कि जो बायेन: छ (पूरा तीन तलाक़ विभिन्न अवसरमा दिइयोस्) त्यसका लागि आवास तथा खर्च आवश्यक नै छैन, जस्तो कि विगत पृष्ठहरूमा वर्णन गरियो। आफ्नो शक्तिका अनुसार राख्नुको अभिप्राय यो हो कि यदि घर ठूलो छ तथा त्यसमा अनेक कोठा छन् त एउटा कोठा त्यसका लागि विशेष गरिदिइयोस् । अन्यथा आफ्नो कोठा त्यसका लागि खाली गरिदेऊन् ।

لِتُضَيِّقُوا عَلَيْهِنَّ ۚ وَإِن كُنَّ أُولَاتِ حَمْلٍ فَأَنفِقُوا عَلَيْهِنَّ حَتَّىٰ يَضَعْنَ حَمْلَهُنَّ ۚ فَإِنْ أَرْضَعْنَ لَكُمْ فَآتُوهُنَّ أُجُورَهُنَّ ۖ وَأْتَمِرُوا بَيْنَكُم بِمَعْرُوفٍ ۖ وَإِن تَعَاسَرْتُمْ فَسَتُرْضِعُ

नदेउ[1] तथा यदि उनीहरू गर्भवती हुन्छन् भने जबसम्म शिशुले जन्म लेओस् उनीहरूलाई खर्च दिँदैरह ।[2] अनि यदि तिमीले भने अनुसार तिनैले दूध खुवाउँछन् भने उनीहरूलाई उनको पारिश्रमिक दिदेउ[3] तथा आपसमा उचित रुपले विचार-विमर्श गर्ने गर[4] तथा यदि तिमी आपसमा तनाव

यसमा हिक्मत यही छ कि समीप रहेर अवधि (इद्दत) पूरा गर्नेछ भने हुनसक्छ कि पतिलाई दया आओस् तथा त्यसलाई पुन: राख्नुको रुचि मनमा उत्पन्न हुनजाओस् । विशेष रुपले यदि बच्चाहरू पनि हुन्छन् त चाहत तथा फेरिबाट राखिहाल्नुको अधिक सम्भावना छ । परन्तु खेदको विषय छ कि मुसलमान यस निर्देशका अनुसार काम गर्दैनन् जसका कारण यस ओदशको लाभ तथा खूबीबाट पनि वञ्चित छन् । हाम्रा समाजमा तलाक् (विवाह विच्छेद) का साथै जुनप्रकार स्त्रीलाई तुरुन्त अछूत बनाएर घरबाट निकालदिइन्छ अथवा कैयन् पटक केटीवाला त्यसलाई आफ्ना घर लैजान्छन्, यो रिवाज (रीति) कुरआन करीमको खुला शिक्षाका प्रतिकूल छ ।

[1]अर्थात् भरण-पोषण अथवा आवासमा त्यसलाई दु:ख दिन अथवा अपमानित गर्न ताकि त्यो घर छोड्न बाध्य हुनजाओस् । इद्दत (अवधि) का बीच यस्तो ढंग नअपनाइयोस् । केही ज्ञाताहरूले यसको भावार्थ यो वर्णन गरेका छन् कि इद्दत (अवधि) समाप्त हुन समीप छ भने त फेरिबाट राखिहालोस् तथा पटक-पटक यस्तो गरोस् जस्तो कि अज्ञानकालमा गरिन्थ्यो, जसलाई रोक्नका लागि धर्मले तलाक् (विवाह-विच्छेद) का पश्चात पत्नीलाई पुन: राख्नुको सीमा निर्धारित गरिदिएको छ ताकि भविष्यमा कोही व्यक्तिले स्त्रीलाई यसप्रकार दु:ख नदेओस् । अब एउटा मानिसले दुई पटक यस्तो गर्नसक्छ अर्थात् तलाक्का पश्चात इद्दत (अवधि) का अन्त हुनुभन्दा पूर्व वापस फर्काइहालोस्, किन्तु तेस्रो पटक जब तलाक् दिनेछ त त्यसका पश्चात उसलाई फर्काउनुको अधिकार पनि समाप्त हुनेछ ।

[2]अर्थात् तलाक् प्राप्त वायेन: (विलग) नै किन नहोस्, यदि गर्भवती छ भने त्यसका भरण-पोषणको खर्च तथा आवास आवश्यक छ, जस्तो कि पहिला पनि वर्णन गरि एको छ ।

[3]अर्थात् तलाक् दिनुका पश्चात यदि त्यसले तिम्रा बच्चालाई दूध खुवाउँछ भने त्यसको पारिश्रमिक तिमीमाथि छ ।

[4]अर्थात् आपसका परामर्शले पारिश्रमिक तथा अन्य मामिलाको निराकरण गरियोस्, जस्तै बच्चाको पिताले रीतिअनुसार पारिश्रमिक देओस्, तथा माता, पिताको शक्तिका अनुसार पारिश्रमिकको माँग गरोस्, आदि ।

لَهٗۤ اُخْرٰىؕ ۝٦

राख्दछौ भने त त्यसको भनाइ अनुसार कुनै अन्यले दूध खुवाउने छ ।[१]

لِيُنْفِقْ ذُوْ سَعَةٍ مِّنْ سَعَتِهٖ ؕ وَمَنْ قُدِرَ عَلَيْهِ رِزْقُهٗ فَلْيُنْفِقْ مِمَّاۤ اٰتٰىهُ اللّٰهُ ؕ لَا يُكَلِّفُ اللّٰهُ نَفْسًا اِلَّا مَاۤ اٰتٰىهَا ؕ سَيَجْعَلُ اللّٰهُ بَعْدَ عُسْرٍ يُّسْرًا ۝٧

(७) धनवालाले आफ्ना धनका अनुसार खर्च गर्नुपर्छ[२] तथा जसको जीविका त्यसका लागि कम गरिएको छ[३] त उसलाई चाहिन्छ कि जे-जति अल्लाह (तआला) ले त्यसलाई प्रदान गरेको छ, त्यसैमध्येबाट (आफ्ना शक्तिका अनुसार) देओस्, कुनै व्यक्तिमाथि अल्लाहले बोझ राख्दैन परन्तु यति नै जति शक्ति त्यसलाई दिएको छ ।[४] अल्लाह (तआलाले) निर्धनताका पश्चात धन पनि प्रदान गर्नेछ ।[५]

---

[१]अर्थात् परस्पर पारिश्रमिक आदिको निर्णय हुन नसकोस् भने कुनै अन्य दूध खुवाउनेवालीसँग मामिला तय गर जसले त्यसका बच्चालाई दूध खुवाओस् ।

[२]अर्थात् दूध खुवाउने स्त्रीहरूलाई पारिश्रमिक आफ्नो शक्तिका अनुसार दिइयोस् । यदि अल्लाहले अधिक धन सम्पत्ति प्रदान गरेको छ भने यसै विस्तारका साथ दूध खुवाउनेवालीको सेवा आवश्यक छ ।

[३]अर्थात् त्यो धनमा कमजोर होस् ।

[४]अतः त्यसले निर्धन तथा दरिद्रलाई यो आदर्श दिँदैन कि त्यसले दूध खुवाउनेवालीलाई अधिक नै पारिश्रमिक देओस् । अभिप्राय यी निर्देशहरूको यो हो कि बच्चीकी आमा तथा त्यसको पिताले यस्तो उचित ढंग अपनाउन कि एक-अर्कालाई कष्ट नपुगोस् तथा बच्चालाई दूध खुवाउने कुराको समस्या नहोस् । जस्तो कि अन्य स्थानमा भन्यो:

﴿ لَا تُضَآرَّ وَالِدَةٌۢ بِوَلَدِهَا وَلَا مَوْلُوْدٌ لَّهٗ بِوَلَدِهٖ ﴾

"न मलाई बच्चाका कारण दुःख पुऱ्याइयोस् र न बाबुलाई ।" (अल-बक़रः २३३)

[५]अतः जसले अल्लाहमाथि विश्वास एवं भरोसा गर्दछन्, अल्लाहले उनका लागि सुविधा एवं विस्तार पनि प्रदान गर्दछ ।

وَكَأَيِّن مِّن قَرْيَةٍ عَتَتْ عَنْ أَمْرِ رَبِّهَا وَرُسُلِهِ فَحَاسَبْنَاهَا حِسَابًا شَدِيدًا وَعَذَّبْنَاهَا عَذَابًا نُّكْرًا ⑧

(८) तथा धेरै बस्ती (वालाहरू) ले आफ्ना प्रभुका आदेशबाट तथा त्यसका सन्देष्टाहरूको अवहेलना गरे[१] त हामीले पनि उनीसित कडा हिसाब लियौं तथा अनदेखा (कठोर) प्रकोप उनीमाथि पारिदियौं ।[२]

فَذَاقَتْ وَبَالَ أَمْرِهَا وَكَانَ عَاقِبَةُ أَمْرِهَا خُسْرًا ⑨

(९) त उनीहरूले आफ्ना कर्तुतहरूको स्वाद चाखे तथा परिणाम स्वरुप उनको हानि नै भयो ।

أَعَدَّ اللَّهُ لَهُمْ عَذَابًا شَدِيدًا ۖ فَاتَّقُوا اللَّهَ يَا أُولِي الْأَلْبَابِ الَّذِينَ آمَنُوا ۚ قَدْ أَنزَلَ اللَّهُ إِلَيْكُمْ ذِكْرًا ⑩

(१०) उनका लागि अल्लाह तआलाले घोर यातनाहरू तयार गरेको छ, त अल्लाहसित तर्स हे बुद्धिमान, ईमान भएकाहरू ! निश्चित रुपमा अल्लाहले तिमीतिर शिक्षा पठाएको छ ।

رَّسُولًا يَتْلُو عَلَيْكُمْ آيَاتِ اللَّهِ مُبَيِّنَاتٍ لِّيُخْرِجَ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ مِنَ الظُّلُمَاتِ

(११) (अर्थात्) सन्देष्टा[३] जसले तिमीलाई अल्लाहका स्पष्ट आदेश पढेर सुनाउँछ ताकि ती मानिसहरूलाई जसले ईमान स्वीकार गर्दछन् तथा सत्कर्म गर्दछन् त्यसले अन्धकारबाट प्रकाशतिर ल्याओस्,[४]

---

[१] عَتَتْ ، أي: تمردت و طغت و استكبرت عن اتباع أمر الله و متابعة رسله अर्थात् अवज्ञा, उद्दण्डता तथा उल्लंघन तथा अल्लाहका ओदशहरू एवं त्यसका रसूलहरूका कुरा मान्नबाट अहंकार तथा घमण्ड गरे ।

[२] منكرا فظيعا-نكرا हिसाब तथा यातना, दुबैको अभिप्राय सांसारिक पकड तथा यातना हो, अथवा फेरि केही ज्ञाताहरूका कथनानुसार वाक्यक्रममा अगाडि-पछाडि गरिदिएको छ । عذابا نكرا त्यो यातना हो जो संसारमा अकाल, धर्तीमा धँसाइदिनु तथा रुप परिवर्तनका रुपमा उनीहरूलाई पुग्यो, तथा حسابا شديدا त्यो हो जो परलोकमा हुनेछ (फ़तहुल क़दीर)

[३] रसूल यो जिक्रसित बदल्छ । अतिशय स्वरुप रसूललाई ज़िक्र भनिएको छ जस्तै भन्दछन्, त्यो त न्यायको मूर्ति हो, अथवा ज़िक्र (स्मृति) सित अभिप्राय पवित्र कुर्आन हो तथा رسولا भन्दा पहिला أرسلنا लुप्त छ, अर्थात, ज़िक्र (कुर्आन) लाई उतान्यो तथा रसूल (सन्देष्टा) लाई पठायो ।

[४] यो रसूलको दायित्व तथा पद वर्णन गरिएको छ कि त्यसले कुर्आनद्वारा मानिसहरूलाई नैतिक पतन तथा शिर्क (बहुदेववाद)

إِلَى النُّورِ ۚ وَمَن يُؤْمِن بِاللَّهِ وَيَعْمَلْ صَالِحًا يُدْخِلْهُ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا أَبَدًا ۖ قَدْ أَحْسَنَ اللَّهُ لَهُ رِزْقًا ⑪

तथा जुन व्यक्तिले अल्लाहमाथि ईमान स्वीकार गऱ्यो तथा सत्कर्म गऱ्यो[1] अल्लाहले त्यसलाई यस्तो स्वर्गमा प्रवेश दिनेछ जसमा नहरहरू प्रवाहित छन्, जसमा उनी सधैं सधैं रहनेछन्। निःसन्देह अल्लाहले त्यसलाई सर्वोत्तम जीविका प्रदान गरेको छ।

اللَّهُ الَّذِي خَلَقَ سَبْعَ سَمَاوَاتٍ وَمِنَ الْأَرْضِ مِثْلَهُنَّ ۖ

(१२) अल्लाह त्यो हो जसले सात आकाश बनायो तथा त्यसैका समान धर्ती पनि।[2] त्यसको

---

एवं पथभ्रष्टताका अन्धकारहरूबाट निकालेर ईमान तथा सत्कर्मका प्रकाशतिर ल्याउँछ। यहाँ الرسول (रसूल) (सन्देष्टा) सित तात्पर्य رسول अर्थात् मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम हुनुहुन्छ।

[1]सत्कर्ममा दुबै कुरा सम्मिलित छन्, आदेश तथा कर्तव्यहरूको पालना तथा अवज्ञा एवं पापहरूबाट बच्नु। प्रयोजन यो हो कि स्वर्गमा ईमान भएकाहरूले प्रवेश पाउनेछन्, जसले केवल मुखबाट नै ईमान व्यक्त गरेका थिएनन्, बरु उनीहरूले ईमानका माँगहरूका अनुसार कर्तव्यहरूको पालन गरेका थिए तथा अवज्ञाहरूबाट पन्छिएका थिए।

[2]أي خَلَقَ مِن الأرض مثلهُنَّ अर्थात् सात आकाशहरूको जस्तै सात धर्तीहरू पनि पैदा गरेको छ। केही ज्ञाताहरूले यसबाट सात महाद्वीप तात्पर्य लिएका छन्, परन्तु यो सही छैन। बरु जुनप्रकार माथि तल्लाहरू सात आकाश छन्, त्यसैप्रकार सात धर्तीहरू छन्, जसका मध्ये अन्तर तथा दूरी छ तथा प्रत्येक धर्तीमा अल्लाहको सृष्टि आबाद छ (अल-कुर्तबी) हदीसहरूबाट पनि यसको समर्थन हुन्छ। जस्तै नबी सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो:

«مَنْ أَخَذَ شِبْرًا مِنَ الأَرْضِ ظُلْمًا، فَإِنَّهُ يُطَوَّقُهُ يَوْمَ الْقِيَامَةِ مِنْ سَبْعِ أَرْضِينَ»

"जसले कसैको वित्ता बराबर भूमि पनि हडप्यो भने केयामतका दिन त्यस भूमिको त्यति भाग सातौं धर्तीहरूबाट तौक (रिङ) बनाएर त्यसका घाँटीमा हालिदिइने छ।" (सहीह मुस्लिम, किताबुलयूअ, बाबु तहरिमिज जुल्मे)

बुखारीका शब्द हुन् خسف به إلى سبع أرضين "त्यसलाई सातौं धर्तीसम्म धँसाइनेछ। (सहीह बुख़ारी, किताबुल मज़ालिम, बाबु इस्मे मन ज़लम् शैअन् मिनल, अर्ज़े) केही ज्ञाताहरू भन्छन् कि प्रत्येक धर्तीमा त्यसै प्रकारको पैग़म्बर (सन्देष्टा) छ जस्तो पैग़म्बर तिम्रो धर्तीमा आयो, जस्तै आदम आदमको समान, नूह नूहका समान, इब्राहीम इब्राहीमका समान, ईसा ईसाका (अलैहिमुस्सलाम) का समान, परन्तु यो कुरा कुनै सही रिवायत (हदीस) बाट प्रमाणित छैन।

يَتَنَزَّلُ الْأَمْرُ بَيْنَهُنَّ لِتَعْلَمُوٓا۟ أَنَّ ٱللَّهَ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ وَأَنَّ ٱللَّهَ قَدْ أَحَاطَ بِكُلِّ شَىْءٍ عِلْمًۢا ﴿١٢﴾

आदेश उनका मध्ये अवतरित हुन्छ[1] ताकि तिमी जानीहाल कि अल्लाह हरेक वस्तुमा सामर्थ्यवान छ । तथा अल्लाह (तआला) ले प्रत्येक वस्तुलाई आफ्ना ज्ञानका परिधिमा घेरेर राखेको छ ।[2]

سُورَةُ التَّحْرِيمِ

## सूरतुत्तहरीम-६६

सूरः तहरीम मदीनामा अवतरित भएको, यसमा बारह आयतहरू एवं दुई रुकूअ छन् ।

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

يَٰٓأَيُّهَا ٱلنَّبِىُّ لِمَ تُحَرِّمُ مَآ أَحَلَّ ٱللَّهُ لَكَ ۖ

(१) हे नबी ! जुन वस्तुलाई अल्लाहले तपाईंका लागि वैध गरिदिएको छ, त्यसलाई तपाईंले अवैध किन गर्नुहुन्छ ?[3] (के) तपाईं आफ्ना

[1]अर्थात् जस्तो प्रत्येक आकाशमा अल्लाहको आदेश लागू तथा प्रभावी छ, यसैप्रकार प्रत्येक धर्तीमाथि त्यसको आदेश चल्छ, आकाशहरूको जस्तै त्यसले सबै धर्तीहरूको पनि व्यवस्था गर्दछ ।

[2]तसर्थ त्यसका ज्ञानबाट कुनै वस्तु बाहिर छैन चाहे त्यो जस्तोसुकै नै होस् ।

[3]नबी सल्लल्लाहु अलैहि व सल्लम जुन वस्तुलाई आफ्ना लागि अवैध गरिहाल्नु भएको थियो त्यो के थियो ? जसमाथि अल्लाहले आफ्नो अप्रियता व्यक्त गऱ्यो । यस सन्दर्भमा एक त त्यो प्रसिद्ध घटना हो जो बुख़ारी तथा सहीह मुस्लिम आदिमा उद्धृत भएको छ कि उहाँ सल्लल्लाहु अलैहि व सल्लम आदरणीय ज़ैनब बिन्ते ज़हशका पास केही बेर रोकिनु हुन्थ्यो, तथा त्यहाँ मधु पिउनु हुन्थ्यो । आदरणीय हफ़सा तथा आयेशा (रज़ीयल्लाहु अन्हुमा) दुबैले त्यहाँ उहाँ सल्लल्लाहु अलैहि व सल्लमलाई अधिक बेरसम्म बस्नुबाट रोकिनुका लागि यो योजना बनाउनु भो कि उनीहरूमध्ये जसका पास पनि रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम जानुहुन्छ त त्यसले उनीसित यो भनोस् कि तपाईंका मुखबाट मग़ाफीर (एक प्रकारको फूल जसमा अप्रिय गन्ध हुन्छ) को गन्ध आइराखेको छ, तथा उहाँहरूले यस्तै गर्नुभयो । उहाँले भन्नुभयो मैले त ज़ैनबका घर केवल मधु पिएको छु । अब म सौगन्ध खान्छु कि यो पिउने छैन, किन्तु यो कुरा तिमीले कसैलाई भन्नुहुन्छ । (सहीह बुखारी तफ़सीर सूरतित तहरीम सुनन नसाईमा

تَبْتَغِيْ مَرْضَاتَ اَزْوَاجِكَ ؕ وَ اللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ①

पत्नीहरूको प्रसन्नता प्राप्त गर्न चाहनुहुन्छ तथा अल्लाह क्षमाशील अत्यन्त दयालु छ ।

قَدْ فَرَضَ اللّٰهُ لَكُمْ تَحِلَّةَ اَيْمَانِكُمْ ۚ وَ اللّٰهُ مَوْلٰىكُمْ ۚ

(२) नि:सन्देह अल्लाह (तआला) ले तपाईंका लागि सौगन्धहरूबाट निस्कनुको विधि नियमित गरिदिएको छ[1] तथा अल्लाह तपाईंको कार्यक्षम

वर्णन गरिएको छ कि त्यो एउटा दासी थिई जसलाई उहाँले आफूमाथि अवैध गरिहाल्नु भएको थियो । (शेख अल्बानीले यसलाई सही भनेका छन्, सुनन नसाई ३/८३ परन्तु अन्य केही विद्वानहरूले यसलाई क्षीण भनेका छन्) केही विद्वानहरूले वर्णन गरेका छन् कि यो दासी मारिया किबतीया थिइन्, जसबाट नबी सल्लल्लाहु अलैहि व सल्लमका पुत्र इब्राहीम पैदा भएको थियो । तिनी एकपटक आदरणीय हफ़साका घर आएकी थिइन् जबकि आदरणीया हफ़सा थिइनन् । संयोगले तिनको उपस्थितिमा आदरणीय हफ़सा आइपुगिन् । तिनलाई नबी सल्लल्लाहु अलैहि व सल्लमका साथ आफ्ना घरमा एकान्तमा देख्नु अप्रिय लाग्यो, जसलाई नबी सल्लल्लाहु अलैहि व सल्लमले पनि बुझिहाल्नुभयो जसपश्चात आरदणीय हफसालाई प्रसन्न गर्नका लागि उहाँले मारियालाई आफूमाथि निषेध गरिहाल्नुभयो तथा हफ़सालाई ताकीद गर्नुभयो कि यो कुरा कसैलाई नभनून् । इमाम इब्ने हज़र एक त यो भन्नुहुन्छ कि यो घटना विभिन्न वर्णन क्रमले आएको छ जो एक अर्कालाई बल पुऱ्याउँछ । दोस्रो कुरो उनी यो भन्नुहुन्छ कि संम्भव छ कि दुबै घटनाहरू नै एकसाथ यस आयतका अवतरणका कारण बनेका होऊन् । (फ़तहुल बारी, तफ़सीर सुरतित तहरीम) इमाम शौकानीले पनि यही विचार व्यक्त गरेका छन् तथा दुबै कथाहरूलाई सही भनेका छन् । यसबाट यो कुरा पनि स्पष्ट हुनजान्छ कि अल्लाहका वैध कुराहरूलाई अवैध गर्नुका अधिकार कसैलाई पनि छैन, यहाँसम्म कि रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम पनि यो अधिकार राख्नुहुन्न ।

[1]अर्थात् प्रायश्चित (कफ़्फ़ारा) दिएर त्यस कामलाई गर्नुको, जसलाई नगर्नुको शपथ ग्रहण गरिएको होस्, अनुमति दिइदियो । सौगन्धको यो प्रायश्चित सूरः मायेदः ८९ मा वर्णन गरिएको छ, तथा उहाँ सल्लल्लाहु अलैहि व सल्लमले पनि प्रायश्चित गर्नुभो । (फ़तहुल क़दीर) यस विषयमा विद्वानहरूमा मतभेद छ कि यदि कसैले आफूमाथि कुनै कुरा अवैध गरेको छ भने त्यसको के आदेश छ ? सामान्य विद्वानहरूका विचारले पत्नीका अतिरिक्त कुनै वस्तुलाई हराम (अवैध) गर्नबाट त्यो अवैध हुनेछ न त्यसमाथि प्रायश्चित (दण्ड) छ । यदि पत्नीलाई आफूमाथि हराम (अवैध) गर्नेछ भने यदि त्यसको आशय तलाक़ (सम्बन्ध विच्छेद) छ भने तलाक़ हुनजानेछ तथा यदि तलाक़को विचार छैन भने मान्य कथन यो हो कि यो सौगन्ध हो, यसका लागि सौगन्धको कफ़्फ़ारा प्रायश्चित) गर्नु आवश्यक छ । (ऐसरुत्तफ़ासीर)

وَهُوَ الْعَلِيمُ الْحَكِيمُ ②

छ तथा त्यही (पूर्ण) ज्ञान भएको एवं हिक्मतवाला छ ।

وَإِذْ أَسَرَّ النَّبِيُّ إِلَىٰ بَعْضِ أَزْوَاجِهِ حَدِيثًا فَلَمَّا نَبَّأَتْ بِهِ وَأَظْهَرَهُ اللَّهُ عَلَيْهِ عَرَّفَ بَعْضَهُ وَأَعْرَضَ عَنْ بَعْضٍ فَلَمَّا نَبَّأَهَا بِهِ قَالَتْ مَنْ أَنْبَأَكَ هَٰذَا قَالَ نَبَّأَنِيَ الْعَلِيمُ الْخَبِيرُ ③

(३) तथा (याद गर) जब नबीले आफ्ना केही पत्नीहरूसित एउटा कुरो सानो स्वरमा भन्नुभयो[१] त जब उसले त्यस कुरोलाई सूचित गरिदियो[२] तथा अल्लाहले आफ्ना नबीलाई त्यसमा अवगत गरिदियो त नबीले केही कुरा त भन्दिनु भयो तथा केही भन्नुभएन, अनि[३] जब नबीले आफ्नी त्यस पत्नीलाई यो कुरा सुनाइदिनुभयो त त्यो भन्नथाली कि यसको सूचना तपाईंलाई कसले दियो ।[४] भन्नुभयो कि सबैकुरा जान्ने पूर्ण सूचना राख्ने अल्लाहले मलाई भनिदिएको छ ।[५]

إِنْ تَتُوبَا إِلَى اللَّهِ فَقَدْ صَغَتْ

(४) (हे नबीका दुबै पत्नीहरू !) यदि तिमी अल्लाहसित क्षमा माँग्दछौ (त अति उत्तम



[१]त्यो गुप्त कुरो मधु (शहद) अथवा दासी मारियालाई हराम गर्ने सम्बन्धी थियो, जो उहाँ सल्लल्लाहु अलैहि व ल्लमले आदरणीया हफ़सासित गर्नु भएको थियो ।

[२]अर्थात् हफ़साले यो कुरा आयेशा रज़ियल्लाहु अन्हुलाई भनिदिइन् ।

[३]अर्थात् हफ़सालाई यो बताउनुभयो कि तिमीले मेरो रहस्य भनिदिएकी छौ, तैपनि आफ्ना मान-सम्मानलाई दृष्टिमा राख्दै सबै कुरा भन्नुभएन ।

[४]जब नवी सल्लल्लाहु अलैहि व सल्लमले आदरणीय हफ़सालाई भन्नुभो कि तिमीले मेरो भेद खोलिदिएकी छौ त तिनी चकित भईन, किनकि तिनले आदरणीय आयेशाका अतिरिक्त कसैलाई यो कुरा भन्नुभएको थिएन तथा आयशाबाट उनलाई आज्ञा थिएन कि तिनी उहाँ सल्लल्लाहु अलैहि व सल्लमलाई भनिदिनेछिन्, किनकि तिनी मामिलामा साक्षी थिइन् ।

[५]यसबाट ज्ञात भयो कि कुर्‌आनका अतिरिक्त पनि उहाँ सल्लल्लाहु अलैहि व सल्लममाथि प्रकाशना (वह्य) को अवतरण हुन्थ्यो ।

قُلُوبُكُمَا ۚ وَإِن تَظَٰهَرَا عَلَيْهِ فَإِنَّ اللَّهَ هُوَ مَوْلَىٰهُ وَجِبْرِيلُ وَصَٰلِحُ الْمُؤْمِنِينَ ۖ وَالْمَلَٰٓئِكَةُ بَعْدَ ذَٰلِكَ ظَهِيرٌ ④

छ)[1] निःसन्देह तिम्रा हृदय झुकिहालेका छन् ।[2] तथा यदि तिमी सन्देष्टाका विरुद्ध एक-अर्काको सहायता गर्नेछौ भने निःसन्देह त्यसको संरक्षक अल्लाह छ एवं जिब्रील छन् तथा सदाचारी ईमान भएकाहरू र उनका अतिरिक्त फरिश्ताहरू पनि सहायता गर्नेवाला छन् ।[3]

عَسَىٰ رَبُّهُۥٓ إِن طَلَّقَكُنَّ أَن يُبْدِلَهُۥٓ أَزْوَٰجًا خَيْرًا مِّنكُنَّ مُسْلِمَٰتٍ مُّؤْمِنَٰتٍ قَٰنِتَٰتٍ تَٰٓئِبَٰتٍ عَٰبِدَٰتٍ سَٰٓئِحَٰتٍ ثَيِّبَٰتٍ وَأَبْكَارًا ⑤

(५) यदि उनी (सन्देष्टा) तिमीलाई तलाक़ (विवाह-विच्छेद) दिनुहुन्छ भने अति शीघ्र उनलाई उनको प्रभु तिम्रा ठाउँमा तिमीभन्दा उत्तम पत्नीहरू प्रदान गर्नेछ,[4] जो इस्लाम भएका, ईमान भएका, अल्लाहका समक्ष नत्मस्तक हुने, क्षमा माँग्ने, इबादत गर्ने, ब्रत (रोज़ा) बस्नेहरू हुनेछन् विधवा तथा कुमारीहरू ।[5]

---

[1]अर्थात् तिम्रो क्षमा स्वीकार गरिनेछ, यो शर्त (إن تتوبا) को लुप्त उत्तर हो ।

[2]अर्थात् सत्यबाट हटिहाले तथा उनको यस्तो कुरोलाई प्रिय राख्नुछ जो नबी सल्लल्लाहु अलैहि व सल्लमलाई अप्रिय थियो । (फ़तहुल क़दीर)

[3]अर्थात् नबीका मुक़ाबिलामा तिमी जत्थाबन्दी गर्नेछौ भने नबीको केही बिगार्न सक्ने छैनौ, यसकारण कि नबीको सहायक त अल्लाह पनि छ तथा सबै मोमिन एवं फरिश्ता पनि ।

[4]यो चेतावनीको लागि सन्देष्टाका पवित्र पत्नीहरूसित भनिदैछ कि अल्लाहले आफ्ना पैग़म्बरलाई तिमीभन्दा राम्रा पत्नी प्रदान गर्नसक्छ ।

[5]ثَيِّبَاتٌ (सैयेबात) ثَيِّبٌ (सयि्यब) को बहुवचन हो (फर्केर आउनेवाली) विधवा नारीलाई सयि्यब यसकारण भनिन्छ कि त्यो पतिबाट वापस फर्केर आउँछ । अनि यसैप्रकार पति बिना रहन्छे जस्तै पहिला थिइन् । أَبْكَارٌ (अबकार) بِكْرٌ (बिक्र) को बहुवचन हो । कुँवारी स्त्रीलाई बिक्र (नई) यसकारण भनिन्छ कि त्यो अझै आफ्नो प्रथम स्थितिमा हुन्छ जसमा पैदा भएकी छ । (फ़तहुल क़दीर) केही रिवायतहरूमा वर्णन छ कि सयि्यबःसित अभिप्राय आदरणीय आसिया (फ़िरऔनकी पत्नी) तथा बिक्रसित ईशदूत ईसाकी आमा मरियम (तात्पर्य) हुन् । अर्थात् स्वर्गमा यी दुबैलाई नबी सल्लल्लाहु अलैहि व सल्लमका पत्नीहरू बनाइदिइनेछ । (अहदीसे ज़ईफ़ा)

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ قُوٓا۟ أَنفُسَكُمْ وَأَهْلِيكُمْ نَارًا وَقُودُهَا ٱلنَّاسُ وَٱلْحِجَارَةُ عَلَيْهَا مَلَٰٓئِكَةٌ غِلَاظٌ شِدَادٌ لَّا يَعْصُونَ ٱللَّهَ مَآ أَمَرَهُمْ وَيَفْعَلُونَ مَا يُؤْمَرُونَ ﴿٦﴾

(६) हे ईमान भएकाहरू ! तिमी स्वयं आफूलाई तथा आफ्ना परिवारहरूलाई त्यस अग्निबाट बचाउ[1] जसको इन्धन मनुष्य छ तथा पत्थर, जसका लागि कठोर हृदय भएका शक्तिशाली फरिश्ताहरू नियुक्त छन्, जसलाई जो आदेश अल्लाह तआला दिन्छ त्यसको अवहेलना गर्दैनन् अपितु जो आदेश दिइन्छ, त्यको पालना गर्दछन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ كَفَرُوا۟ لَا تَعْتَذِرُوا۟ ٱلْيَوْمَ ۖ إِنَّمَا تُجْزَوْنَ مَا كُنتُمْ تَعْمَلُونَ ﴿٧﴾

(७) हे काफिरहरू ! आज तिमी (विवशता एवं) बहाना व्यक्त नगर । तिमीलाई केवल तिम्रा कुकर्महरूको प्रतिफल दिइदैछ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ تُوبُوٓا۟ إِلَى ٱللَّهِ

(८) हे ईमान भएकाहरू ! तिमी अल्लाहका अगाडि (सत्य एवं) शुद्ध क्षमा माँग । सम्भव छ कि

सम्भव छ कि यस्तो होस्, किन्तु यी रिवायतहरू (उद्धरण) का आधारमा यस्तो विचार राख्नु तथा बयान गर्नु सही छैन, किनकि वर्णनुक्रमका अनुसार यी रिवायतहरू (हदीस) अमान्य छन् ।

[1]यसमा ईमान भएकाहरूलाई उनका एउटा अति महत्वपूर्ण उत्तरदायित्वतिर ध्यान दिलाइएको छ तथा त्यो यो हो कि आफ्ना साथ आफ्ना घरवालाको पनि सुधार तथा उनको इस्लामी शिक्षा-दीक्षाको व्यवस्था गर्नुस्, ताकि यो सबै नरकको इन्धन बन्नबाट बच्न जाऊन् । यसैकारण रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो कि जब बच्चा सात वर्षको हुन्छ त त्यसलाई नमाज़को आदेश देउ तथा दस वर्षको आयुमा नमाज़मा आलस्य देख्छौ भने तिमी उनलाई सजाय देउ । (अबू-दाऊद, तिर्मिजी, किताबुस्सलात) धर्मविदहरूले भनेका छन् कि यसैप्रकार रोज़ा (ब्रत) पनि उनलाई बस्न लगाइयोस् तथा अन्य धार्मिक आदेशहरूका पालनाको निर्देश दिइयोस् ताकि जब उनी बोधको आयुलाई पुग्दछन् त उनमा धार्मिक बोध पनि प्राप्त भइसकेको होस् । (इब्ने कसीर)

[2]विशुद्ध क्षमा-याचना यो हो: (१) जुन पापबाट क्षमा माँगिराखेको छ, त्यसलाई त्यागिदेओस्, (२) त्यसमा अल्लाहका सामु लज्जित होस्, (३) भविष्यमा त्यसलाई नगर्नुको दृढ संकल्प गरोस्, (४) यदि त्यसको सम्बन्ध भक्तहरूको अधिकारसित छ त जसको हक खोसिएको छ, त्यसको क्षतिपूर्ति गरोस्, जससँग अत्याचार गरेको छ, त्यससित क्षमा माँगोस् । केवल मुखले तौबा-तौबा गर्नु कुनै अर्थ राख्दैन ।

تَوْبَةً نَّصُوحًا ۖ عَسَىٰ رَبُّكُمْ أَن يُكَفِّرَ عَنكُمْ سَيِّئَاتِكُمْ وَيُدْخِلَكُمْ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ يَوْمَ لَا يُخْزِي اللَّهُ النَّبِيَّ وَالَّذِينَ آمَنُوا مَعَهُ ۖ نُورُهُمْ يَسْعَىٰ بَيْنَ أَيْدِيهِمْ وَبِأَيْمَانِهِمْ يَقُولُونَ رَبَّنَا أَتْمِمْ لَنَا نُورَنَا وَاغْفِرْ لَنَا ۖ إِنَّكَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٨﴾

तिम्रो प्रभुले तिम्रा पाप मिटाइदेओस् तथा तिमीलाई यस्ता स्वर्गमा प्रवेश देओस् जसमा तल नहरहरू प्रवाहित छन्, जुन दिन अल्लाह (तआला) ले नबी (सन्देष्टा) लाई तथा ईमान भएकाहरूलाई जो उनका साथ छन् अपमानित गर्नेछैन । उनको ज्योति उनका अगाडि तथा उनका दायाँ दगुरिरहेको हुन्छ । यिनी प्रार्थनाहरू गरिराखेका हुनेछन् कि हे हाम्रा प्रभु ! हामीलाई पूर्ण प्रकाश प्रदान गर[1] तथा हामीलाई क्षमा गरिदेउ, नि:सन्देह तिमी हरेक वस्तुमाथि सामर्थ्यवान छौ ।

يَا أَيُّهَا النَّبِيُّ جَاهِدِ الْكُفَّارَ وَالْمُنَافِقِينَ وَاغْلُظْ عَلَيْهِمْ ۚ وَمَأْوَاهُمْ جَهَنَّمُ ۖ وَبِئْسَ الْمَصِيرُ ﴿٩﴾

(९) हे नबी ! काफिरहरू तथा मुनाफ़िकहरूसित धर्मयुद्ध गर्नुस्[2] तथा उनीमाथि कडाइ गर्नुस्[3] तिनको वासस्थान नरक् हो[4] र यो अति नराम्रो स्थान हो ।

ضَرَبَ اللَّهُ مَثَلًا لِّلَّذِينَ كَفَرُوا

(१०) अल्लाह (तआला) ले काफ़िरहरूका लागि

[1]यो प्रार्थना ईमान भएकाहरूले त्यस समय गर्नेछन् जब मुनाफ़िकहरूको प्रकाश निभाइदिनेछ, जस्तो कि सूर: हदीदमा विवरण गुज्रयो । ईमानवालाले भन्नेछन् कि स्वर्गमा जाँदासम्म हाम्रो यो प्रकाश शेष राख तथा यसलाई पूर्ण गरिदेऊ ।

[2]काफ़िरहरूका साथ जिहाद तथा लडाईं लडेर एवं मुनाफ़िकहरूसित उनीमाथि अल्लाहको दण्ड नियम लागू गरेर, जब उनीहरू यस्ता काम गर्दछन् जो दण्डनीय हुन्छ ।

[3]अर्थात् धर्मका प्रचार-प्रसारमा कडाई गर्नुस् तथा धर्म-विधानहरूमा दृढता अपनाउनुस्, (किनकि लातका भूत बातले मान्ने छैनन्) । यसको अभिप्राय यो हो कि धर्मका प्रचारमा कहिले नम्रता तथा कहिले कडाइको आवश्यकता हुन्छ, प्रत्येक स्थानमा नम्रता पनि उचित छैन, न प्रत्येक स्थानमा कडाई लाभप्रद छ । धर्मका प्रचार-प्रसारमा स्थितिहरू तथा समय एवं व्यक्तिहरूका अनुसार कहिल्यै कोमलता अथवा कडाई गर्नुको आवश्यकता छ, अर्थात् काफ़िर तथा मुनाफ़िक़हरू दुबैको स्थान नरक छ ।

امْرَاَتَ نُوْحٍ وَّامْرَاَتَ لُوْطٍ ؕ كَانَتَا تَحْتَ عَبْدَيْنِ مِنْ عِبَادِنَا صَالِحَيْنِ فَخَانَتٰهُمَا فَلَمْ يُغْنِيَا عَنْهُمَا مِنَ اللّٰهِ شَيْـًٔا وَّقِيْلَ ادْخُلَا النَّارَ مَعَ الدّٰخِلِيْنَ ۝١٠

नूहका तथा लूतका पत्नीहरूको उदाहरण दिइएको छ ।[1] यी दुबै हाम्रा भक्तहरूमध्ये दुई सदाचारी भक्तहरूका परिवारमा थिए, अनि उनीहरूले उनका साथ विश्वासघात गरे[2] त ती दुबै (भक्त) ले उनीबाट अल्लाहको (कुनै यातनालाई) रोक्न सकेन[3] तथा आदेश दिइयो कि (महिलाहरू !) नरकमा जानेहरूका साथ तिमी दुबै पनि गइहाल ।[4]

وَضَرَبَ اللّٰهُ مَثَلًا لِّلَّذِيْنَ اٰمَنُوا

(११) तथा अल्लाह (तआ़ला) ले ईमानवालाहरु

[1] مَثَلٌ को अर्थ हो यस्तो स्थितिको वर्णन जसमा विचित्रता तथा अनौठोपन होस् ताकि त्यसद्वारा एक अर्को स्थितिको परिचय हुन जाओस् जो विचित्र तथा अनौठा हुनमा त्यसका समान होस् । अभिप्राय यो भयो कि यी काफ़िरहरूको दशाका लागि अल्लाहले एउटा उदाहरण दिएको छ जो नूह तथा लूतका पत्नीको हुन् ।

[2] यहाँ विश्वासघातसित अभिप्राय सतीत्वमा विश्वासघात होइन, किनकि यस कुरामा "इजमाअ" (सहमति) छ कि कुनै नबीकी पत्नी व्यभिचारीणी हुँदैन । (फ़तहुल क़दीर) विश्वासघातको अर्थ यो हो कि यिनी आफ्‌ना पतिहरूमाथि ईमान स्वीकार गरेनन्, निफ़ाक़ (दुविधा) मा ग्रस्त रहे तथा उनका सहानुभूतिहरू आफ्ना काफ़िर जातिका साथ रहे, जस्तो कि नूहकी पत्नीले आदरणीय नूह (अलैहिस्सलामका) विषयमा मानिसहरूसित भन्दथी कि यो उन्मादग्रस्त (दीवाना) छ तथा लूतकी पत्नी आफ्‌ना सम्प्रदायलाई घरमा आउने आगन्तुकहरूको सूचना पुऱ्याउँथी । केही मानिस भन्दछन् कि यी दुबै आफ्‌ना जातिका मानिसहरूमा आफ्ना पतिहरूको चुक्ली गर्दथी ।

[3] अर्थात् नूह तथा लूत दुबै अल्लाहका पैग़म्बर (सन्देष्टा) थिए, जो अल्लाहका समीपस्थ भक्तहरू हुन्छन्, तैपनि आफ्ना पत्नीहरूलाई अल्लाहको यातनाबाट बचाउन सकेनन् ।

[4] यो उनीसित प्रलयका दिन भनिनेछ अथवा मृत्युका समय उनीसित भनियो । काफ़िरहरूको उदाहरण यहाँ विशेष रुपले वर्णन गर्नुको अभिप्राय पवित्र पत्नीहरूलाई यो चेतावनी दिनु हो कि उनी निःसन्देह त्यस रसूलकी घरकी शोभा हुन्, जो सम्पूर्ण सृष्टिमा सर्वोत्तम छन् । परन्तु उनीहरूले याद राख्नुपर्छ कि यदि उनीहरूले रसूलको विरोध गरे अथवा उनलाई दुःख पुऱ्याए भने उनीहरू पनि अल्लाहको पकडमा आउन सक्दछन्, तथा यदि यस्तो भयो त कोही उनलाई बचाउनेवाला छैन ।

امْرَاَتَ فِرْعَوْنَ مـ اِذْ قَالَتْ رَبِّ ابْنِ لِيْ عِنْدَكَ بَيْتًا فِي الْجَنَّةِ وَنَجِّنِيْ مِنْ فِرْعَوْنَ وَعَمَلِهٖ وَنَجِّنِيْ مِنَ الْقَوْمِ الظّٰلِمِيْنَ ﴿١١﴾

लागि फ़िरऔनकी पत्नीको उदाहरण वर्णन गऱ्यो[1] जबकि उसले प्रार्थना गरी हे मेरा प्रभु ! मेरा लागि आफ्ना पास स्वर्गमा घर बनाउ तथा मलाई फ़िरऔनबाट तथा त्यसका कर्मबाट बचाउ र मलाई अत्याचारीहरूबाट मुक्ति प्रदान गर ।

وَمَرْيَمَ ابْنَتَ عِمْرٰنَ الَّتِيْٓ اَحْصَنَتْ فَرْجَهَا فَنَفَخْنَا فِيْهِ مِنْ رُّوْحِنَا وَصَدَّقَتْ بِكَلِمٰتِ رَبِّهَا وَكُتُبِهٖ وَكَانَتْ مِنَ الْقٰنِتِيْنَ ﴿١٢﴾

(१२) तथा (उदाहरण वर्णन गऱ्यो) मरियम पुत्री इमरानको[2] जसले आफ्नो सतीत्वको सुरक्षा गरी, अनि हामीले आफ्नो तर्फबाट त्यसमा प्राण फुक्यौं तथा (मरियम) ले आफ्ना प्रभुका कुराहरू[3] तथा त्यसका किताबहरूको पुष्टि गरिन् तथा इबादत गर्नेहरू मध्येबाट थिइन् ।[4]

---

[1]अर्थात् उनका प्रोत्साहन, अडिग रहनु तथा धर्ममा दृढता एवं आपदामा धैर्यका लागि, तथा यो पनि बताउनका लागि कि कुफ्रको वैभव तथा आतङ्क मुसलमानहरूको केही बिगाड्न सक्दैन, जस्तो फ़िरऔनकी पत्नी छे जो आफ्नो समयका सबभन्दा ठूला काफ़िरका अधीन थिई, किन्तु त्यसले आफ्नो पत्नीलाई रोक्न सकेन ।

[2]आदरणीय मरियमको चर्चाबाट उद्देश्य यो वर्णन गर्नु हो कि यद्यपि एउटा बिग्रेको जातिबीच रहन्थिन्, किन्तु अल्लाहले उनलाई लोक तथा परलोकको प्रतिष्ठा एवं चमत्कारबाट सम्मानित गऱ्यो तथा पुरै विश्वका महिलाहरूमाथि तिनलाई श्रेष्ठता प्रदान गऱ्यो ।

[3]प्रभुका शब्दहरूसित अभिप्राय अल्लाहका धर्म-विधान हो ।

[4]अर्थात् यस्ता मानिसहरू तथा परिवारमध्ये थिइन् जो आज्ञाकारी, उपासक तथा सुधार एवं आज्ञापालनमा प्रसिद्ध थियो । हदीसमा वर्णन छ कि जन्नति महिलाहरूमा सर्वश्रेष्ठ हज़रत ख़दीजा, हज़रत फ़ातिमा, हज़रत मरीयम तथा फ़िरऔनकी पत्नी आदरणीय आसीया, रज़ीयल्लाहु अन्हु हुन् । (मुसनद अहमद १/२९३, मजमउज्जवायेद ९/२२३, अस्सहीह लिल अल्बानी नं.१५०८) एक अर्को हदीसमा छ कि पुरुषहरूमा त परिपूर्ण धेरै भएका छन्, किन्तु महिलाहरूमा पूर्ण मात्र फ़िरऔनकी पत्नी आसीया मरियम पुत्री इमरान तथा ख़दीजा पुत्री खुवैलिद हुनुहुन्छ, तथा आयेशा रज़ियल्लाहु अन्हाको प्रधानता नारीहरूमाथि यस्तो छ जस्तै सरीद (एक प्रकारका खाना) लाई तमाम खानाहरूमाथि प्रधानता प्राप्त छ । (बुख़ारी, किताबु बदईल ख़ल्क, तथा मुस्लिम, किताबुल फ़ज़ाइल बाबु फज़ाईलि ख़दीजा)

# सूरतूल मुल्क-६७

سُوْرَةُ الْمُلْكِ

सूरः मुल्क* मक्कामा अवतरित भएको, यसमा तीस आयतहरू तथा दुई रुकूअ छन्।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ।

تَبٰرَكَ الَّذِيْ بِيَدِهِ الْمُلْكُ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ①

(१) अति शुभ छ त्यो (अल्लाह) जसका हातमा राज्य छ[1] तथा जो प्रत्येक वस्तुमाथि सामर्थ्यवान छ।

الَّذِيْ خَلَقَ الْمَوْتَ وَالْحَيٰوةَ لِيَبْلُوَكُمْ اَيُّكُمْ اَحْسَنُ عَمَلًا ۭ

(२) जसले जीवन तथा मृत्युलाई यसकारण पैदा गऱ्यो कि तिम्रो परीक्षा लिइयोस् कि तिमीमध्ये

---

*यसको प्रधानतामा अनेक हदीसहरू आएका छन्, जसमध्ये केही सहीह अथवा हसन छन्। एउटामा रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो, "अल्लाहको किताबमा एउटा सूरः छ जसमा मात्र तीस आयत छन्। यसले मानिसको सिफ़ारिश गर्नेछ यहाँसम्मकि त्यसलाई क्षमा गरिदिइनेछ।" (तिर्मिज़ी, अबू दाऊद, इब्ने माजा तथा मुसनद अहमद २/२९९, ३२१" दोस्रो रिवायतमा छ। "कुरआन पाकको एक सूरत छ, जसले आफ्ना पाठकको तर्फबाट लड्ने छ यहाँसम्मकि त्यसलाई स्वर्गमा प्रवेश दिलाउनेछ।" (मजमउज जवायेद ७/१७२, जकरहल अलबानी फिल जामेइस सगीर नं. ३६४४) तिर्मिजीको एक रिवायत यहाँ यो पनि वर्णन गरिएको छ कि रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम राति सुत्नुभन्दा पहिला सूरः अलिफ. लाम. मीम. अस्सजदा तथा सूरः मुल्क अवश्य पढ्नुहुन्थ्यो। (अबवाबु फ़ज़ायेलिल क़ुरआन) एक रिवायत अल्लामा अल्बानीले अस्सहीहामा उद्धृत गर्नुभएको छ سُوْرَةُ تَبَارَكَ هِيَ الْمَانِعَةُ مِنْ عَذَابِ الْقَبْرِ "सूरः मुल्क कब्रको यातनाबाट रोक्नेवाली छ" (न. ११४० भाग-३ पृष्ठ १३१) अर्थात् जो त्यसलाई पढिरहनेछ आशा छ कि कब्रको यातनाबाट सुरक्षित रहनेछ, प्रतिबन्ध यो हो कि त्यसले इस्लामका आदेश एवं अनिवार्यताहरूको पालना गर्दैरहोस्।

[1] تَبَارَكَ तबारक بَرَكَةٌ बाट छ اَلنَّمَاءُ وَالزِّيَادَةُ बढ्नु तथा अधिक हुनुको अर्थामा छ। केही धर्मविदहरूले अर्थ गरेका छन् श्रृष्टिका गुणहरूबाट सर्वोच्च तथा महान تفاعل को रुप अतिशयका लागि छ। "उसैका हातमा राज्य छ" अर्थात् प्रत्येक प्रकारको सामर्थ्य तथा प्रभुत्व उसैलाई प्राप्त छ, त्यसले सृष्टिमा जस्तो चाहन्छ गर्दछ कसैले त्यसलाई रोक्न सक्दैन। त्यसले राजालाई रङ्क तथा रङ्कलाई राजा बनाउन सक्छ, निर्धनलाई धनी तथा धनीलाई निर्धन गर्नसक्छ, कसैले त्यसको हिक्मत तथा इच्छामा हस्तक्षेप गर्न सक्दैन।

وَهُوَ الْعَزِيزُ الْغَفُورُ ۝٢

राम्रो कर्म कसले गर्दछ[1] तथा त्यो प्रभावशाली एवं क्षमाशील छ ।

الَّذِي خَلَقَ سَبْعَ سَمَاوَاتٍ طِبَاقًا ۖ مَا تَرَىٰ فِي خَلْقِ الرَّحْمَٰنِ مِن تَفَاوُتٍ ۖ فَارْجِعِ الْبَصَرَ هَلْ تَرَىٰ مِن فُطُورٍ ۝٣

(३) जसले सात आकाश तल-माथि पैदा गऱ्यो (त हे देख्नेवालाहरू ! अल्लाह) दयावानको उत्पत्तिमा कुनै असङ्गति देख्ने छैनौ[2] पुन: फर्केर हेरिहाल कि के कुनै चीर (चिरा) पनि देखिदैछ ?[3]

ثُمَّ ارْجِعِ الْبَصَرَ كَرَّتَيْنِ يَنقَلِبْ إِلَيْكَ الْبَصَرُ خَاسِئًا وَهُوَ حَسِيرٌ ۝٤

(४) फेरि दोहोऱ्याएर दुई-दुई पटक हेरिहाल, तिम्रो दृष्टि तिमीतिर हीन (तथा विवश) भएर थाकेर फर्कनेछ ।[4]

وَلَقَدْ زَيَّنَّا السَّمَاءَ الدُّنْيَا بِمَصَابِيحَ وَجَعَلْنَاهَا رُجُومًا لِّلشَّيَاطِينِ ۖ وَأَعْتَدْنَا لَهُمْ عَذَابَ السَّعِيرِ ۝٥

(५) र नि:सन्देह हामीले आकाशीय संसारलाई दीपहरू (ताराहरू) ले सुशोभित गऱ्यौं तथा तिनीहरूलाई शैतानहरूलाई हान्ने साधन बनाइदियौं[5] र शैतानहरूका लागि हामीले (नरकमा पोल्ने वाली) यातना तयार गरिदियौं ।

[1]आत्मा एउटा यस्तो अदृश्य वस्तु हो कि जुन शरीरसित त्यसको सम्बन्ध तथा लगाव हुनजान्छ त्यो जीवित कहलाउँछ तथा जुन शरीरबाट त्यसको सम्बन्ध टुटेर जान्छ, त्यो मृत्युसँग मिल्न जान्छ । अल्लाहले यो सामयिक जीवन-क्रम यसकारण स्थापित गरेको छ ताकि त्यसले परीक्षा लेओस् कि यस जीवनको सही प्रयोग कसले गर्दछ ? जसले त्यसलाई ईमान तथा आज्ञापालनका लागि प्रयोग गर्नेछ त्यसका लागि उत्तम फल छ तथा अरुहरूका लागि यातना ।

[2]अर्थात् कुनै विपरीतता, कुनै बाङ्गोपना तथा कुनै कमी छैन, अपितु तिनी पूर्णत: सोभ्रा एवं सामान्य छन्, जसले यसको संकेत दिन्छन् कि यी सबैको रचयिता केवल एक छ, अनेक छैनन् ।

[3]कैयन् पटक हेर्नाले केही कमी तथा दोष निस्केर आउँछ । अल्लाह तआला भन्नुहुन्छ कि पटक-पटक हेर, के तिमीलाई कुनै दरार देखिन्छ ?

[4]यो अधिक बल दिनका लागि छ जसको आशय आफ्ना विशाल सामर्थ्य तथा एकतालाई अधिक स्पष्ट गर्नु हो ।

[5]यहाँ ताराहरूका दुई लक्ष्य भनिएका छन्, एउटा आकाशहरूको शोभा किनकि तिनी दीपहरूका समान बलिराखेका देखिन्छन् । दोस्रो यदि शैतानले आकाशहरूतिर जाने प्रयास गर्दछन् त यिनी आगो बनेर उनीमाथि खस्छन् । तेस्रो, उनको यो उद्देश्य हो जसलाई अर्को स्थानमा वर्णन गरिएको छ कि तिनीहरूबाट जल-थलहरूमा मार्गको संकेत पाइन्छ ।

وَلِلَّذِينَ كَفَرُوا بِرَبِّهِمْ عَذَابُ جَهَنَّمَ ۖ وَبِئْسَ الْمَصِيرُ ⑥

(६) तथा आफ्ना प्रभुसँग कुफ्र गर्नेहरूका लागि नरकको यातना छ तथा त्यो धेरै नराम्रो स्थान हो ।

إِذَا أُلْقُوا فِيهَا سَمِعُوا لَهَا شَهِيقًا وَهِيَ تَفُورُ ⑦

(७) जब त्यसमा तिनी हालिनेछन् त त्यसको ठूलो आवाज सुन्नेछन् तथा त्यो उम्लिराखेको हुनेछ ।[1]

تَكَادُ تَمَيَّزُ مِنَ الْغَيْظِ ۖ كُلَّمَا أُلْقِيَ فِيهَا فَوْجٌ سَأَلَهُمْ خَزَنَتُهَا أَلَمْ يَأْتِكُمْ نَذِيرٌ ⑧

(८) (प्रतीत हुनेछ कि अझै) क्रोधले च्यातिनेछ,[2] जतिखेर त्यसमा त्यससित नरकका दरोगाहरू (थानेदारहरू) ले सोध्नेछन् कि के तिम्रा पासमा कोही तर्साउनेवाला आएको थिएन ?[3]

قَالُوا بَلَىٰ قَدْ جَاءَنَا نَذِيرٌ فَكَذَّبْنَا وَقُلْنَا مَا نَزَّلَ اللَّهُ مِنْ شَيْءٍ إِنْ أَنْتُمْ إِلَّا فِي ضَلَالٍ كَبِيرٍ ⑨

(९) उनीहरूले उत्तर दिनेछन् कि निःसन्देह आएको त थियो, परन्तु हामीले त्यसलाई झुठ्लायौं तथा भन्यौं कि अल्लाह (तआला) ले केही पनि अवतरित गरेन तिमी निकै ठूला कुपथमा नै छौ ।[4]

وَقَالُوا لَوْ كُنَّا نَسْمَعُ أَوْ نَعْقِلُ مَا كُنَّا فِي أَصْحَابِ السَّعِيرِ ⑩

(१०) तथा भन्नेछन् कि यदि हामीले सुन्ने गर्‍यौं अथवा बुझ्ने गर्थ्यौं भने नरकवासीहरूमा

[1] شَهِيق त्यस ध्वनिलाई भन्दछन् जुन गधा प्रथम पटक निकाल्छ, यो अत्यन्त नराम्रो ध्वनि हुन्छ । नरक पनि गधा जस्तै कराइरहेको तथा आगोमा राखेको हाँडी (भाँडो) का समान उम्लिराखेको हुनेछ ।

[2] अर्थात् क्रोध तथा रोषका कारण त्यसका एक भाग एक अर्कोसित अलग भईहाल्नेछ । यो नरक काफिरहरूलाई देखेर क्रोधित भइहाल्नेछन् । जसको समझ अल्लाह तआलाले त्यसका भित्र पैदा गर्नेछ । अल्लाह तआलाका लागि नरक बोध तथा सम्बोधन पैदा गरिदिनु कुनै कठिन छैन ।

[3] जसका कारण आज तिमीलाई नरकको यातनाको स्वाद चाख्नुपरेको छ ।

[4] अर्थात् हामीले पैगम्बरहरूलाई मान्नुको सट्टा तिनीहरूको इन्कार गरिदियौं, आकाशीय किताबहरूलाई मानेनौं यहाँसम्मकि अल्लाहका पैगम्बरहरूसित हामीले भन्यौं कि तिमी ठूलै विचलनमा लिप्त छौ ।

(सम्मिलित) हुने थिएनौ ।[1]

فَاعۡتَرَفُوۡا بِذَنۡۢبِهِمۡ ۚ فَسُحۡقًا لِّاَصۡحٰبِ السَّعِيۡرِ ⑪

(११) त उनीहरूले आफ्ना अपराधलाई स्वीकार गरिहाले ।[2] अब यी नरकवासीहरू हटिहालून् (टाढा होऊन्) ।[3]

اِنَّ الَّذِيۡنَ يَخۡشَوۡنَ رَبَّهُمۡ بِالۡغَيۡبِ لَهُمۡ مَّغۡفِرَةٌ وَّاَجۡرٌ كَبِيۡرٌ ⑫

(१२) नि:सन्देह जो मानिस आफ्ना प्रभुसित नदेखिकनै तर्सन्छन्, उनका लागि क्षमा छ तथा ठूलो प्रतिफल छ ।[4]

وَاَسِرُّوۡا قَوۡلَـكُمۡ اَوِ اجۡهَرُوۡا بِهٖ ؕ اِنَّهٗ عَلِيۡمٌۢ بِذَاتِ الصُّدُوۡرِ ⑬

(१३) तथा तिमी आफ्ना कुराहरूलाई विस्तारै भन तथा उच्च स्वरमा,[5] त्यो त छातिमा (लुकेका) कुराहरूलाई पनि राम्ररी जान्दछ ।[6]

[1]अर्थात् ध्यानले सुन्दथे तथा उनका कुरा एवं उद्देश्यहरूलाई मान्दथे, यसैप्रकार अल्लाहद्वारा प्रदान गरिएको बुद्धिले सोच्नु सम्भनुको काम लिन्थे त आज हामी नरकवासीहरूमा सम्मिलित हुने थिएनौं ।

[2]जसका कारण यातनाका पात्र बने तथा त्यो हो कुफ्र (अविश्वास) तथा अम्बिया अलैहिमुस्सलाम (ईशदूतहरू) लाई भुठ्लाउनु ।

[3]अर्थात् अब उनका लागि अल्लाह तथा त्यसको दयालुताबाट दूरी नै छ । केही विद्वानहरू भन्दछन् कि سُحۡق (सुहक) नरकको एउटावादी (उपत्यका) को नाम हो ।

[4]यी काफ़िरहरु तथा भुठ्लाउनेहरूका मुकाबिलामा ईमान भएकाहरूको तथा ती वरदानहरूको वर्णन हो जो उनलाई क़ेयामत (प्रलय) का दिन अल्लाहका पास प्राप्त हुनेछ । بِالۡغَيۡبِ को एक भावार्थ यो हो कि उनीहरूले अल्लाहलाई त देखेनन्, किन्तु पैग़म्बरहरूलाई मान्दै अल्लाहको यातनाबाट तिनीहरू तर्संदैरहे । दोस्रो अर्थ यो पनि हुनसक्छ कि मानिसहरूको दृष्टिबाट ओभ्रल, अर्थात् एकान्तमा अल्लाहसित तर्संदैरहे ।

[5]यो काफ़िरहरूसित फेरि सम्बोधन हो । अभिप्राय यो हो कि तिमी रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमका बारेमा लुकेर कुराहरू गर अथवा खुला रुपमा, सबै अल्लाहका ज्ञानमा छ, त्यसबाट कुनै कुरा लुकेको छैन ।

[6]यो विस्तारै एवं स्वरले गरिने कुरालाई जान्नुको कारण भनिदैछ कि त्यो त मनोगत विचारहरूसित अवगत छ, त तिम्रा कुराहरू कसरी त्यसबाट लुकेको रहनसक्छ ? प्रश्न इन्कारका लागि छ अर्थात् रहन सक्दैन ।

أَلَا يَعْلَمُ مَنْ خَلَقَ وَهُوَ اللَّطِيفُ الْخَبِيرُ ﴿١٤﴾

(१४) के त्यसैले जान्दैन जसले पैदा गऱ्यो ?[१] अनी त्यो सूक्ष्मदर्शी एवं जान्नेवाला पनि छ ।[२]

هُوَ الَّذِي جَعَلَ لَكُمُ الْأَرْضَ ذَلُولًا فَامْشُوا فِي مَنَاكِبِهَا وَكُلُوا مِنْ رِزْقِهِ وَإِلَيْهِ النُّشُورُ ﴿١٥﴾

(१५) त्यो त्यही हो जसले तिम्रा लागि धर्तीलाई अधीन (एवं वशीभूत) बनायो[३] ताकि तिमी त्यसका मार्गहरूमा आवागमन गरिरह[४] तथा त्यसबाट प्रदान गरिएको जीविकालाई खाउ-पिउ[५] त्यसैतिर (तिमीलाई) जीवित भई उभिनुछ ।

ءَأَمِنْتُمْ مَنْ فِي السَّمَاءِ أَنْ يَخْسِفَ بِكُمُ الْأَرْضَ فَإِذَا هِيَ تَمُورُ ﴿١٦﴾

(१६) के तिमी यस कुरासित निर्भय भइसकेछौ कि आकाशहरूवालाले तिमीलाई धर्तीमा धँसाइदेओस् तथा सहसा धर्ती कम्पित हुन जाओस् ।[६]

[१]अर्थात् छातीहरू एवं हृदयमा पैदा हुने विचारलाई पैदा गर्ने अल्लाह नै हो, त के त्यो आफ्नो सृष्टिबाट अज्ञान रहन सक्छ, प्रश्न इन्कारकारका लागि छ अर्थात् रहन सक्दैन ।

[२]لَطِيفٌ को अर्थ हो सूक्ष्मदर्शी, "अर्थात् जसको ज्ञान यति सूक्ष्म छ कि मनोगत कुराहरूलाई पनि त्यो जान्दछ ।" (फ़तहुल क़दीर)

[३]ذَلُولٌ को अर्थ हो अधीन, जो तिम्रा अगाडि झुकोस्, टाउको नफर्काओस् । अर्थात् धर्तीलाई तिम्रा लागि कोमल तथा सरल गरिदिएको छ । त्यसलाई यति कडा बनाएन कि तिम्रो त्यसमाथि आबाद हुन तथा यातायात कठिन हुन जाओस् ।

[४]مَنَاكِبُ बहुवचन हो مَنْكِبٌ जसको अर्थ हो तिर । यहाँ अभिप्राय मार्ग तथा दिशाहरू हुन् । यो आज्ञा औचित्यका लागि छ, अर्थात् त्यसका मार्गहरुमा हिंड ।

[५]अर्थात् धर्तीको उपजबाट खाउ, पिउ ।

[६]अल्लाह जो आकाशहरूमाथि अर्थात् सर्वोच्च आसनमा उच्चय छ, यो काफ़िरहरूलाई तसाईंदैछ कि आकाशहरूको मालिक अल्लाह जब चाहोस् तिमीलाई धर्तीमा धँसाइदेओस् अर्थात् त्यही धर्ती जो तिम्रो निवासस्थान तथा तिम्रो जीविकाको भण्डार एवं उद्गम हो, अल्लाह त्यसै धर्तीलाई जो अति शान्त छ, गति तथा कम्पनमा ल्याएर तिम्रो विनाशको कारण बन्नसक्छ ।

أَمْ أَمِنتُم مَّن فِي السَّمَاءِ أَن يُرْسِلَ عَلَيْكُمْ حَاصِبًا ۖ فَسَتَعْلَمُونَ كَيْفَ نَذِيرِ ⑰

(१७) अथवा के तिमी यस कुराबाट निर्भीक भयौ कि आकाशहरूवालाले तिमीमाथि ढुंगा बर्साउन सक्छ ?[१] अनि त तिमीलाई ज्ञात नै भइहाल्नेछ कि मेरो तर्साइ कस्तो थियो ?[२]

وَلَقَدْ كَذَّبَ الَّذِينَ مِن قَبْلِهِمْ فَكَيْفَ كَانَ نَكِيرِ ⑱

(१८) तथा उनीभन्दा पूर्वका मानिसहरूले पनि झुठ्लाएका थिए, (त हेर) उनीमाथि मेरो प्रकोप कस्तो भयो ?

أَوَلَمْ يَرَوْا إِلَى الطَّيْرِ فَوْقَهُمْ صَافَّاتٍ وَيَقْبِضْنَ ۚ مَا يُمْسِكُهُنَّ إِلَّا الرَّحْمَٰنُ ۚ إِنَّهُ بِكُلِّ شَيْءٍ بَصِيرٌ ⑲

(१९) के यिनीहरू आफूमाथि कहिल्यै पखेटा फैलाएको तथा (कहिलेकाहीं) खुम्च्याएका (उड्नेवाला) पंक्षीहरूलाई हेर्दैनन्[३] उनीहरूलाई (अल्लाह) परम दयालुले नै (वायुमण्डल तथा आकाशमा) थामेको छ ।[४] निःसन्देह प्रत्येक वस्तु उसको दृष्टिमा छ ।

أَمَّنْ هَٰذَا الَّذِي هُوَ جُندٌ لَّكُمْ يَنصُرُكُم مِّن دُونِ الرَّحْمَٰنِ ۚ إِنِ الْكَافِرُونَ إِلَّا فِي غُرُورٍ ⑳

(२०) अल्लाहका अतिरिक्त तिम्रो कुन चाहिं सेना छ जसले तिम्रो सहायता गर्न सक्दछ ।[५] काफ़िर त पूर्णरूपले धाकामा नै छन् ।[६]

[१]जस्तै उसले लूतको जाति तथा असहाबुल फ़ील (हाथीवाला अबराहा त्यसको सेना) माथि वर्षायो तथा पत्थरहरूको वर्षाले उनको विनाश गरिदियो ।

[२]परन्तु त्यस समय त्यो ज्ञान व्यर्थ हुनेछ ।

[३]अर्थात् पखेरु जब हावामा उड्दछ त त्यसले पंखलाई फैलाउन्छ तथा कहिले उड्नुका बीच पंखहरूलाई खुम्च्याउँछ । यो फैलाउनु صَفٌّ (सफ्फ़) तथा खुम्च्याउनु قَبْضٌ (कब्ज़) लाई भनिन्छ ।

[४]अर्थात् उडानका समय यी पंक्षीहरूलाई थामिराख्नेवाला को हो, जसले उनीहरूलाई धर्तीमा खस्न दिंदैन । यो अल्लाह दयावानकै सामर्थ्यको एउटा नमूना हो ।

[५]यो प्रश्न हकार्नका लागि हो । جُندٌ को अर्थ हो सेना, जत्था, अर्थात् कुनै सेना तथा जत्था यस्तो छैन जसले तिमीलाई अल्लाहको यातनाबाट बचाउन सकोस् ।

[६]जसमा उनीहरूलाई शैतानले ग्रस्त गरेको छ ।

أَمَّنْ هَٰذَا الَّذِي يَرْزُقُكُمْ إِنْ أَمْسَكَ رِزْقَهُ ۚ بَل لَّجُّوا فِي عُتُوٍّ وَنُفُورٍ ﴿٢١﴾

(२१) यदि अल्लाह (तआला) ले आफ्नो जीविका रोकिदिन्छ, त (भन) को छ, जसले त्यसपछि तिम्रो जीविका चलाउनेछ ?[1] बरु (काफ़िर) त उद्दण्डता एवं विमुख हुनमा दृढ भइहालेका छन् ।[2]

أَفَمَن يَمْشِي مُكِبًّا عَلَىٰ وَجْهِهِ أَهْدَىٰ أَمَّن يَمْشِي سَوِيًّا عَلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿٢٢﴾

(२२) त त्यो व्यक्ति अधिक मार्गदर्शनमा छ जो आफ्ना मुखका बल घोप्टिएर हिंडछ[3] अथवा त्यो जो सोझो (खुट्टाहरूका बल) सोझो मार्गमा हिंडिराखेको हुन्छ ?[4]

قُلْ هُوَ الَّذِي أَنشَأَكُمْ وَجَعَلَ لَكُمُ السَّمْعَ وَالْأَبْصَارَ

(२३) भनिदिनुस् कि त्यही (अल्लाह) हो जसले तिमीलाई पैदा गर्‍यो[5] तथा तिम्रा कान आँखा

---

[1]अर्थात् अल्लाहले वर्षा नगरोस्, अथवा धर्तीको उपजबाट रोकिदेओस् अथवा तयार फसलहरूलाई नाश गरिदेओस्, जस्तो कि कहिलेकाहीं यस्तो गर्दछ जसका कारण तिम्रो खाद्यको क्रम रोकिन जाओस् । यदि अल्लाह यस्तो गर्दछ भने त के कोही अरु छ जसले अल्लाहको यस इच्छाको विपरीत तिमीलाई जीविका प्रदान गर्नसकोस् ?

[2]अर्थात् शिक्षा तथा सदुपदेशको यी कुराहरूको उनीमाथि कुनै प्रभाव हुँदैन, बरु उनी सत्यबाट विमुखता तथा घृणामा नै बढ्दै गइराखेका छन्, शिक्षा ग्रहण गर्छन् न चिन्तन-मनन गर्छन् ।

[3]मुखका बल घोप्टिई हिंड्नेलाई दायाँ-बायाँ केही देखिंदैन, न त्यो ठोकरहरूबाट सुरक्षित रहन्छ । के यस्तो व्यक्ति आफ्ना लक्ष्यसम्म पुग्न सक्दछ ? निश्चय त्यो पुग्न सक्दैन । यसैप्रकार संसारमा अल्लाहको आज्ञापालन नगर्ने व्यक्ति परलोकको सफलताबाट वञ्चित रहनेछ ।

[4]जसमा कुनै बाङ्गोपना नहोस् तथा उसलाई अगाडि एवं दायाँ-बायाँ पनि उसलाई देखियोस् । खुला कुरा यो हो कि यो आफ्ना नियमित लक्ष्यसम्म पुग्नेछ अर्थात् अल्लाहको आज्ञापालना गर्ने परलोकमा सफल (प्रसन्न) रहनेछ । केही धार्मिकविद भन्दछन् कि यो मोमिन तथा काफ़िर दुबैको स्थितिको वर्णन हो जो उनको प्रलयको दिन हुनेछ । काफ़िर मुखका बल नरकमा लागिनेछन् तथा मोमिन सीधा आफ्ना पगहरुमा हिंडेर स्वर्गमा जानेछन् । जस्तो काफिरहरूको बारेमा अन्य स्थानमा भन्यो:

﴿وَنَحْشُرُهُمْ يَوْمَ الْقِيَامَةِ عَلَىٰ وُجُوهِهِمْ﴾

"हामीले उनलाई क़ेयामतका दिन एकत्रित गर्नेछौं ।" (सूरः बनी इस्राईल-९७)

[5]अर्थात् पहिलोपटक पैदा गर्ने अल्लाह नै हो ।

وَالْأَفْـِٕدَةَ ۭ قَلِيلًا مَّا تَشْكُرُونَ ﴿٢٣﴾

एवं हृदय बनायो ।[१] तिमी निकै कम कृतज्ञता व्यक्त गर्दछौ ।[२]

قُلْ هُوَ الَّذِي ذَرَأَكُمْ فِي الْأَرْضِ وَإِلَيْهِ تُحْشَرُونَ ﴿٢٤﴾

(२४) भनिदिनुस् कि त्यही हो जसले तिमीलाई धर्तीमा फैलाइदियो तथा उसतिर तिमी एकत्रित गरिनेछौ ।[३]

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٢٥﴾

(२५) तथा (काफ़िर) सोध्छन् कि त्यो वायदा (वाचा) कहिले प्रकट हुनेछ यदि तिमी साँचो हौ (भने बताउ) ?[४]

قُلْ إِنَّمَا الْعِلْمُ عِندَ اللَّهِ وَإِنَّمَا أَنَا نَذِيرٌ مُّبِينٌ ﴿٢٦﴾

(२६) (तपाईं) भनिदिनुस् यसको ज्ञान त अल्लाहलाई नै छ ।[५] म त स्पष्टरुपले सावधान गरिदिने हूँ ।[६]

---

[१]जसबाट तिमी सुन्न सक, देख्न सक तथा अल्लाहको रचनामा चिन्तन-मनन गरी त्यसको ज्ञान प्राप्त गर्नसक । तीन शक्तिहरूको चर्चा गरेको छ, जसबाट मानिस हेर्नु सुन्नु तथा बुझ्नु कुराहरूको ज्ञान प्राप्त गर्न सक्छ । यो एक प्रकार ले तर्कको पूर्ति पनि हो तथा अल्लाहका यी उपकारहरूमा कृतज्ञता नदेखाउनुको निन्दा पनि । यसैकारण अगाडि भन्यो, "तिमी निकै कम कृतज्ञता देखाउँछौ ।"

[२]अर्थात् شُكْرًا قَلِيلًا अथवा زَمَنًا قَلِيلًا कम कृतज्ञतासित तात्पर्य उनीहरूतिरबाट कृतज्ञता नहुनु हो । (फ़तहुल क़दीर)

[३]अर्थात् मानिसहरूलाई रचेर धर्तीमा फैलाउनेवाला पनि त्यही हो तथा प्रलयका दिन सबैलाई एकत्र पनि उसैको पास हुनुछ, कुनै अन्यका पास होइन ।

[४]काफ़िर यो उपहास स्वरुप तथा प्रलयलाई असम्भव मान्दै भन्थे ।

[५]त्यसका अतिरिक्त कोही पनि जान्दैन । दोस्रो स्थानमा भन्यो :

﴿قُلْ إِنَّمَا عِلْمُهَا عِندَ رَبِّي﴾

"तपाई भनिदिनुस् कि यसको ज्ञान केवल मेरो प्रभुकै पासमा छ ।" (अल-आराफ-१८७)

[६]अर्थात् मेरो काम त त्यस परिणामसित तर्साउनु हो जो मलाई झुठ्लाउनुको कारण तिम्रो हुनेछ । अरु शब्दहरूमा मेरो काम सावधान गर्नु हो, परोक्षका खबरहरू भन्नु होइन, परन्तु यो कि जसका सम्बन्धमा अल्लाहले स्वयं मलाई भनिदेओस् ।

فَلَمَّا رَاَوْهُ زُلْفَةً سِيْٓـَٔتْ وُجُوْهُ الَّذِيْنَ كَفَرُوْا وَقِيْلَ هٰذَا الَّذِيْ كُنْتُمْ بِهٖ تَدَّعُوْنَ ﴿٢٧﴾

(२७) जब यिनीहरूले[1] (बाचा) लाई निकटतम् पाउनेछन् त्यस समय यी काफ़िरहरूका मुख बिग्रेका हुनेछन्[2] तथा भनिनेछ कि यही हो जसलाई तिमीले माँग्ने गर्दथ्यौ ।[3]

قُلْ اَرَءَيْتُمْ اِنْ اَهْلَكَنِيَ اللّٰهُ وَمَنْ مَّعِيَ اَوْ رَحِمَنَا فَمَنْ يُّجِيْرُ الْكٰفِرِيْنَ مِنْ عَذَابٍ اَلِيْمٍ ﴿٢٨﴾

(२८) (तपाईं) भनिदिनुस् ! कि ठीक छ यदि मलाई तथा मेरो साथीहरूलाई अल्लाह (तआला) ले नष्ट गरिदिन्छ अथवा हामीमाथि दया गर्दछ, (जे पनि होस् यो त भन) कि काफ़िरहरूलाई कष्टदायी यातनाबाट कसले बचाउनेछ ?[4]

قُلْ هُوَ الرَّحْمٰنُ اٰمَنَّا بِهٖ وَعَلَيْهِ تَوَكَّلْنَا ۚ فَسَتَعْلَمُوْنَ مَنْ هُوَ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٢٩﴾

(२९) (तपाईं) भनिदिनुस् कि त्यही परम दयालु छ, हामीले त त्यसमाथि ईमान स्वीकार गऱ्यौं[5] तथा त्यसैमाथि हामीले भरोसा गऱ्यौं[6] तिमीलाई शीघ्र नै ज्ञात हुनेछ कि स्पष्ट मार्ग-विचलनमा को छ ?[7]

---

[1]"رَاَوْهُ" मा अधिकांश व्याख्याकारहरूका विचारका अनुसार सर्वनाम केयामतको यातनातिर फर्किराखेको छ ।

[2]अर्थात् अपमान, भयानकता तथा डरले उनका अनुहारका रङ्ग उडिराखेका हुन्छन्, जसलाई अर्को स्थानमा अनुहारहरू काला हुनुबाट व्यंजित गरिएको छ । (आले-इमरान-१०६)

[3] تَدَّعُوْنَ (तद्दऊन) तथा تُدْعَوْنَ (तुदऔन) दुबै एउटै अर्थमा छन् । अर्थात् यो यातना जो तिमीले देखिराखेका छौ त्यही हो जसको तिमी संसारमा माँग गरिराखेका थियौ । जस्तो सूर:साद, १६ तथा अल-अंफ़ाल, ३२ आदिमा छ ।

[4]अभिप्राय यो हो कि यी काफ़िरहरूलाई त अल्लाहको यातनाबाट कोही बचाउनेवाला छैन, चाहे अल्लाह आफ्ना रसूल तथा त्यसमाथि ईमान स्वीकार गर्नेहरूलाई मृत्यु अथवा हत्याद्वारा नाश गरिदेओस् । अथवा उनीहरूलाई अवसर प्रदान गरिदेओस् । अथवा यो अर्थ हो कि हामीले ईमान स्वीकार गरेपनि भय तथा आशाका बीच छौं, "त तिम्रा कुफ्रका बावजूद तिमीलाई यातनाबाट कसले बचाउनेछ ?"

[5]अर्थात् त्यसको एकतामा, यसैकारण त्यसका साथ साझीदार बनाउँदैनौं ।

[6]कुनै अरुमाथि होइन । हामीले आफ्ना सबै मामिला उसैलाई समर्पित गर्दछौं । कुनै अरुलाई होइन जस्तो मिश्रणवादी गर्दछन् ।

[7]तिमी हौ या हामी, यसमा काफ़िरहरूका लागि कडा धम्की छ ।

قُلۡ أَرَءَيۡتُمۡ إِنۡ أَصۡبَحَ مَآؤُكُمۡ غَوۡرٗا فَمَن يَأۡتِيكُم بِمَآءٖ مَّعِينِۭ ۝٣٠

(३०) (तपाईं) भनिदिनुस् ठीक छ, यो त बताउ कि यदि तिम्रा (पिउनका लागि) पानी धर्तीले सोसिहालोस्, त को छ जो तिम्रा लागि निथरा (सङलिएको) पानी ल्याउँछ ?[१]

## سُورَةُ القَلَمِ

## सूरतुल क़लम-६८

सूर: क़लम मक्कामा अवतरित भएको, यसमा बाउन्न आयातहरू एवं दुई रुकूअ छन् ।

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु तथा अपार कृपालु छ ।

نٓۚ وَٱلۡقَلَمِ وَمَا يَسۡطُرُونَ ۝١

(१) नून[२] सौगन्ध छ कलमको[३] तथा त्यसको जे-जति कि उनीहरू (फरिश्ताहरू) लेख्दछन् ।[४]

---

[१] غَـــوۡر (गौर) को अर्थ हो सुक्नु अथवा यति गहिराईमा जानु कि त्यहाँबाट पानी निकाल्न सम्भव नहोस् । अर्थात् यदि अल्लाह तआलाले पानी सुकाइदिन्छ कि त्यसको अस्तित्व नै रहँदैन वा यति गहिराइमा गरिदेओस् कि पानी निकाल्ने सबै मेशीनहरू विफल हुन जाऊन त भन त्यस पश्चात को छ जो प्रवाहित, स्वच्छ, संङलिएको जल सुलभ गराउन सक्छ ? अर्थात् कोही छैन । यो अल्लाहको दया हो कि तिम्रो अवज्ञाका उपरान्त पनि त्यसले तिमीलाई जलबाट वञ्चित गर्दैन ।

[२] ن त्यसैप्रकारको अलग अक्षरहरू मध्येबाट हो, जस्तो यसभन्दा पहिला ق ، ص तथा अन्य सूरतहरूका आरम्भिक अक्षर गुज्रिसकेका छन् ।

[३] कलमको सौगन्ध खायो जसको यसकारण एउटा महत्व छ कि यसकाद्वारा वर्णन व्याख्या हुन्छ । केही ज्ञाताहरू भन्दछन् कि यसबाट तात्पर्य त्यो विशेष क़लम छ जसलाई अल्लाहले सर्वप्रथम पैदा गऱ्यो तथा त्यसलाई भाग्य लेख्नुको आदेश दियो । अत: उसले अन्तसम्म सबै हुने कुराहरूलाई लेखिदियो । (तिर्मिजी तफ़सीर सूर: नून वल क़लम तथा अल्बानीले यसलाई सही भनेका छन् ।)

[४] يَسۡطُرُونَ सर्वनाम लेखकहरूतिर फर्कन्छ जसलाई कलम शब्द बताइराखेको छ, किनकि लेख्नुका यन्त्रको चर्चाबाट लेखकको अस्तित्व आवश्यक हुन्छ । अभिप्राय यो हो कि त्यस लेखको पनि सौगन्ध जो लेखक लेख्दछन्, अथवा सर्वनाम फरिश्तातिर फर्कन्छ जस्तो कि अनुवादबाट स्पष्ट छ ।

مَآ اَنْتَ بِنِعْمَةِ رَبِّكَ بِمَجْنُوْنٍ ۝٢

(२) तपाई आफ्नो प्रभुको कृपाले पागल हुनुहुन्न ।[१]

وَاِنَّ لَكَ لَاَجْرًا غَيْرَ مَمْنُوْنٍ ۝٣

(३) तथा निःसन्देह तपाईका लागि अनन्त प्रतिफल छ ।[२]

وَ اِنَّكَ لَعَلٰى خُلُقٍ عَظِيْمٍ ۝٤

(४) तथा निःसन्देह तपाई अति (उत्तम) स्वभावमा हुनुहुन्छ ।[३]

فَسَتُبْصِرُ وَ يُبْصِرُوْنَ ۝٥

(५) त अब तपाईंले पनि देख्नुहुनेछ तथा यिनले पनि देख्नेछन् ।[४]

بِاَيِّكُمُ الْمَفْتُوْنُ ۝٦

(६) कि तिमीमध्ये भ्रष्ट को छ ।

اِنَّ رَبَّكَ هُوَ اَعْلَمُ بِمَنْ ضَلَّ عَنْ سَبِيْلِهٖ ۖ وَهُوَ اَعْلَمُ بِالْمُهْتَدِيْنَ ۝٧

(७) निःसन्देह तिम्रो प्रभु आफ्ना मार्गबाट विचलित हुनेहरूलाई राम्ररी जान्दछ, तथा त्यो सत्यमार्गीहरूलाई राम्ररी जान्दछ ।

[१]यो सौगन्धको उत्तर हो, जसमा काफ़िरहरूका कथनको खण्डन छ, उनीहरूले तपाईंलाई दिवाना भन्दथे ।

[२]नबूअत (दूतत्व) का कर्तव्यलाई पूरा गर्नका लागि जे पनि दुःख तपाईंले सहन गर्नुभो तथा शत्रुहरूका व्यङ्ग तपाईंले सुन्नु भएको छ त्यसमा अल्लाहको तर्फबाट अनन्त प्रतिफल तपाईंका लागि छ । مَنٌّ को अर्थ काट्नु हो ।

[३] خُلُقٍ عَظِيْمٍ सित तात्पर्य इस्लाम धर्म तथा पवित्र कुर्आन हो । अभिप्राय यो हो कि तिमी त्यस स्वभावमा छौ जसको आदेश अल्लाहले कुर्आनमा अथवा इस्लाम धर्ममा दिएको छ । अथवा यसबाट अभिप्राय त्यो सभ्यता, शिष्टाचार, कोमलता, उदारता, अमानत, (नासो) सत्यता, सहनशीलता, श्रेष्ठता तथा अन्य नैतिक गुण हुन्, जसमा उहाँ सल्लल्लाहु अलैहि वसल्लम नबी हुनुभन्दा पहिला विशेषता राख्नुहुन्थ्यो तथा नबी हुनुका पश्चात पनि तिनमा अधिक उचाई तथा विस्तार भयो । यसैकारण जब आदरणीय आयशा रज़ि अल्लाहु अन्हासित उहाँका आचरणका बारेमा प्रश्न गरियो त भन्नभयो: «كَانَ خُلُقُهُ الْقُرْآنَ» "उहाँका चरित्र पवित्र कुर्आन अनुसार थियो ।" (मुस्लिम किताबुल मुसाफ़िरीन, बाबु जामेए सलातिल लैले व मन नाम अन्हु औ मरेज) आदरणीय आयशाको उत्तर खुल्के अजाम خُلُقٍ عَظِيْمٍ दुबै भावार्थहरूलाई घेरेको छ ।

[४]अर्थात् जब सत्य खुल्नेछ तथा सबै पर्दा उठ्नेछन् र यो प्रलयका दिन हुनेछ । केही ज्ञाताहरूले यसलाई बद्रका रणसित सम्बन्धित बताएका छन् ।

فَلَا تُطِعِ الْمُكَذِّبِيْنَ ﴿٨﴾

(८) त तपाईं झुठ्लाउनेहरूको (कुरा) स्वीकार नगर्नुस् ।[1]

وَدُّوْا لَوْ تُدْهِنُ فَيُدْهِنُوْنَ ﴿٩﴾

(९) उनीहरू त चाहन्छन् कि तपाईं अलि नरम हुनुस् त यिनी पनि नरम होऊन् ।[2]

وَلَا تُطِعْ كُلَّ حَلَّافٍ مَّهِيْنٍ ﴿١٠﴾

(१०) तथा तपाई कुनै यस्तो व्यक्तिको पनि भनाई नमान्नुस् जो अधिक सौगन्ध खानेवाला हीन होस् ।

هَمَّازٍ مَّشَّآءٍ بِنَمِيْمٍ ﴿١١﴾

(११) दुष्ट, दुराचारी तथा चुग्ली गर्नेवाला होस् ।

مَّنَّاعٍ لِّلْخَيْرِ مُعْتَدٍ اَثِيْمٍ ﴿١٢﴾

(१२) भलाईबाट रोक्नेवाला, सीमा उल्लंघन गर्नेवाला पापी होस् ।

عُتُلٍّ بَعْدَ ذٰلِكَ زَنِيْمٍ ﴿١٣﴾

(१३) घमण्डी अनि साथै कुवंश होस् ।[3]

اَنْ كَانَ ذَا مَالٍ وَّبَنِيْنَ ﴿١٤﴾

(१४) (त्यसको उद्दण्डता) केवल यसकारण छ कि त्यो धनवान तथा पुत्रहरूवाला छ ।[4]

---

[1]आज्ञापालनको अर्थ यहाँ त्यो कोमलता हो जो मानिस आफ्नो अन्तरआत्माका विपरीत देखाउँछ । अर्थात् मुश्रिकहरू (बहुदेववादीहरू) तिर झुक्न तथा उनीसित कोमलता गर्नुको आवश्यकता छैन ।

[2]अर्थात् उनी त चाहन्छन् कि तिमी उनका पूज्यहरूका सम्बन्धमा कोमल स्वभाव अपनाऊ । किन्तु असत्यका साथ कोमल स्वादको परिणाम यो हुनेछ कि असत्यका पूजारी आफ्नो अनृतको पूजा छाड्नुमा नरम हुन जानेछन् । अत: सत्यका विषयमा आलस्य धर्मका प्रचारका विषयमा नीति एवं नबूअत (दूतत्व) का कार्यका लागि अति हानिकारक छ ।

[3]यो ती काफ़िरहरूका नैतिक पतनको चर्चा हो जसका कारण पैग़म्बरलाई आलस्य गर्नुबाट रोकिदैछ । यी दुर्गुण कुनै एक व्यक्तिका वर्णन गरिएका छन् अथवा साधारण काफ़िरहरूका ? पहिला कुराको स्रोत यद्यपि केही रिवायतहरू छन्, परन्तु उनी अप्रमाणिक छन् । अत: उद्देश्य साधारण छ अर्थात् प्रत्येक त्यो व्यक्ति हो जसमा उक्त गुणहरू पाइन्छन् । زَنِيْم हरामी अथवा कुख्यात एवं बदनाम छ ।

[4]अर्थात् उक्त दुराचारको काम त्यसले यसकारण गर्दछ कि अल्लाहले त्यसलाई धन एवं सन्तानका वरदानहरूबाट सम्पन्न गरेको छ, अर्थात् त्यसले कृतज्ञताको साटो कृतघ्नता गर्छ । केही विद्वानहरूले यसलाई وَلَا تُطِعْ सित सम्बन्धित गरेका छन्, अर्थात् जसमा यी दुष्टताहरू हुन्, त्यसको कुरा केवल यसकारण मानिसको यो कि त्यो धन तथा सन्तानवाला छ ?

إِذَا تُتْلَىٰ عَلَيْهِ آيَاتُنَا قَالَ أَسَاطِيرُ الْأَوَّلِينَ ⑮

(१५) जब त्यसका समक्ष हाम्रा आयतहरू पढिन्छन् त यो भन्दिन्छ कि यिनी त पूर्वका मानिसहरूका कथाहरू हुन् ।

سَنَسِمُهُ عَلَى الْخُرْطُومِ ⑯

(१६) हामीले पनि त्यसको सूँड (नाक) माथि दाग दिनेछौं ।[1]

إِنَّا بَلَوْنَاهُمْ كَمَا بَلَوْنَا أَصْحَابَ الْجَنَّةِ إِذْ أَقْسَمُوا لَيَصْرِمُنَّهَا مُصْبِحِينَ ⑰

(१७) नि:सन्देह हामीले उनको त्यसैप्रकार परीक्षा लियौं,[2] जुनप्रकार हामीले बागवालाहरूको परीक्षा लिएका थियौं ।[3] जबकि उनीहरूले सौगन्ध खाए कि प्रात: हुनासाथ त्यस (बगैंचा) का फल टिप्नेछन् ।[4]

وَلَا يَسْتَثْنُونَ ⑱

(१८) तथा इन्शाल्लाह (यदि अल्लाहले चाह्यो) भनेनन् ।

---

[1]केही धर्मविद्हरूका निकट यसको सम्बन्ध संसारसित छ, भनिन्छ कि बद्रका रणमा ती काफ़िरहरूका नाकहरूलाई तलवारहरूको निशाना बनाइयो । केही अन्य भन्दछन् कि यो केयामतका दिन नरकवासीहरूको चिन्ह हुनेछ कि उनका नाकहरूलाई दागिनेछ, अथवा यसको अभिप्राय अनुहारहरूको कालिमा हो, जस्तो कि काफ़िरहरूका अनुहार त्यस दिन काला हुनेछन् । केही ज्ञाताहरू भन्दछन् कि काफ़िरहरूको यो परिणाम लोक-परलोक दुबै ठाउँमा सम्भव छ ।

[2]अभिप्राय मक्कावासी हुन् । उनीहरूलाई धन एवं सन्तान दियो ताकि उनी अल्लाहको कृतज्ञता देखाउन्, परन्तु उनीहरूले कृतघ्नता तथा घमण्डको मार्ग अपनाए त हामीले उनीहरूलाई भोक तथा अकालको परीक्षामा पारिदियौं, जसमा उनी नबी सल्लल्लाहु अलैहि वसल्लमका शापका कारण केही दिन फँसिरहे ।

[3]बगैंचावालाहरूको कथा अरबहरूमा प्रसिद्ध थियो । यो बगैंचा सन्आ (यमन) बाट दुई फरसँग (छ मील) को दूरीमा थियो । त्यसको स्वामीले त्यसको उपजमध्येबाट केही भाग गरीब तथा निर्धनहरूका लागि पनि खर्च गर्दथ्यो जब त्यसको सन्तान त्यसको उत्तराधिकारी बने त उनले भने कि हाम्रो खर्च नै कठिनाइले पूरा हुन्छ त हामीले त्यसको आय गरीब तथा दरिद्रहरूलाई कसरी देऔं । यसकारण अल्लाहले त्यस बगैंचालाई नै ध्वस्त गरिदियो । भनिन्छ कि यो घटना आदरणीय इसा अलैहिस्सलामलाई आकाशमा उचालिनुका केही समय पश्चात नै भयो । (फतहुल कदीर) यो सबै विवरण तफसीरवाली रिवायतहरूको हो ।

[4] صرم को अर्थ हो, फल र खेतीलाई स्याहार्नु, مُصْبِحِينَ अवस्थावाचक हो, अर्थात् बिहान हुनासाथ नै फल झराल्नेछौं र पैदावार स्याहार्नेछौं ।

فَطَافَ عَلَيْهَا طَآئِفٌ مِّن رَّبِّكَ وَهُمْ نَآئِمُونَ ﴿١٩﴾

(१९) त त्यसमाथि तिम्रो प्रभुतिरबाट एउटा बिपदा चारैतिरबाट घुम्यो तथा उनीहरू सुतिराखेका थिए ।[१]

فَأَصْبَحَتْ كَالصَّرِيمِ ﴿٢٠﴾

(२०) त त्यो (बगैंचा) यस्तो भइहाल्यो जस्तो काटिएको खेती ।[२]

فَتَنَادَوْا مُصْبِحِينَ ﴿٢١﴾

(२१) अब प्रातः हुनासाथ उनीहरूले एक-अर्कालाई आवाज दिए ।

أَنِ اغْدُوا عَلَىٰ حَرْثِكُمْ إِن كُنتُمْ صَارِمِينَ ﴿٢٢﴾

(२२) कि यदि तिमीले फल टिप्नुछ भने आफ्नो खेतीका लागि प्रातःकाल नै हिंडिहाल ।

فَانطَلَقُوا وَهُمْ يَتَخَافَتُونَ ﴿٢٣﴾

(२३) अनि यिनी सबै विस्तारै कुरा गर्दै हिंडे ।[३]

أَن لَّا يَدْخُلَنَّهَا الْيَوْمَ عَلَيْكُم مِّسْكِينٌ ﴿٢٤﴾

(२४) कि आजका दिन कुनै निर्धन तिम्रा निकट नआओस् ।[४]

وَغَدَوْا عَلَىٰ حَرْدٍ قَادِرِينَ ﴿٢٥﴾

(२५) तथा छिट्टै प्रातःकाल नै पुगे (ठानिरहेका थिए) कि हामीले नियन्त्रण प्राप्त गर्‍यौं ।[५]

---

[१]केही विद्वानहरू भन्छन् कि त्यसलाई राता-रात आगो लाग्यो, केही अन्य भन्दछन् कि जीब्रिल अलैहिस्सलामले आएर त्यसको सत्यानाश गरिदिनुभयो ।

[२]अर्थात् जस्तो खेति काट्नुको पश्चात सुख्दछ, त्यसैप्रकार सम्पूर्ण बगैंचाहरू नाश भए । केही ज्ञाताहरूले अनुवाद गरेका छन्, "कालो राती जस्तै भयो अर्थात् जलेर ।

[३]अर्थात् बगैंचातिर जानका लागि एक त बिहानै निस्के, अर्को बिस्तारै कुरा गर्दै ताकि कसैलाई उनीहरू जानुको ज्ञान नहोस् ।

[४]अर्थात् उनी एक अर्कासित भन्दैरहे कि आज कोही बगैंचामा आएर हामीसित केही नमाँगोस् जस्तै हाम्रा पिताका समय आउने गर्दथे तथा आफ्नो भाग लिएर जान्थे ।

[५] حَـرْد (हर्दिन्) को एक अर्थ त शक्ति तथा बल गरिएको छ जसलाई अनुवादकले 'लम्कँदै' सित व्यंजित गरेको छ । केहीले क्रोध तथा द्वेष गरेका छन्, अर्थात् निर्धनहरूमाथि क्रोध देखाउदै अथवा ईर्ष्या गर्दै । قَادِرِين अवस्थावाचक हो । अर्थात् आफ्ना मामिलाको उनीहरूले अनुमान लगाए अथवा आफ्ना विचारमा उनीहरूले आफ्ना बगैंचाहरूमाथि सामर्थ्य प्राप्त गरे । अथवा अभिप्राय यो हो कि उनीहरूले गरीबहरूमाथि नियन्त्रण प्राप्त गरे ।

فَلَمَّا رَأَوْهَا قَالُوْٓا اِنَّا لَضَآلُّوْنَ ۝٢٦

(२६) अनि जब उनीहरूले बगैंचा देखे[1] त भन्नलागे कि निःसन्देह हामीले मार्ग बिर्सयौं ।[2]

بَلْ نَحْنُ مَحْرُوْمُوْنَ ۝٢٧

(२७) होइन-होइन बरु हामी महरुम (बञ्चित) गरियौं ।[3]

قَالَ اَوْسَطُهُمْ اَلَمْ اَقُلْ لَّكُمْ لَوْلَا تُسَبِّحُوْنَ ۝٢٨

(२८) ती सबैमा जो उत्तम थियो उसले भन्यो कि मैले तिमीहरूसित भन्दैनथे कि तिमी (अल्लाहको) तस्बीह किन गर्दैनौ ?[4]

قَالُوْا سُبْحٰنَ رَبِّنَآ اِنَّا كُنَّا ظٰلِمِيْنَ ۝٢٩

(२९) (त) सबै भन्नलागे कि हाम्रो प्रभु पवित्र छ, निःसन्देह हामी नै अत्याचारी थियौं ।[5]

فَاَقْبَلَ بَعْضُهُمْ عَلٰى بَعْضٍ يَّتَلَاوَمُوْنَ ۝٣٠

(३०) अनि उनीहरू एक अर्कातिर मुख गरेर गाली-गलौच गर्नथाले ।

قَالُوْا يٰوَيْلَنَآ اِنَّا كُنَّا طٰغِيْنَ ۝٣١

(३१) भन्नलागे हाय अफसोच ! निःसन्देह हामी उद्दण्ड थियौं ।

عَسٰى رَبُّنَآ اَنْ يُّبْدِلَنَا خَيْرًا مِّنْهَآ اِنَّآ اِلٰى رَبِّنَا رٰغِبُوْنَ ۝٣٢

(३२) के विचित्र छ कि हाम्रो प्रभुले हामीलाई यसभन्दा उत्तम प्रतिफल दिदेओस्, निःसन्देह हामी अब[6] आफ्ना

[1] अर्थात् बगैंचाका स्थानलाई खरानीको थुप्रो अथवा त्यसलाई ध्वस्त देखे ।

[2] प्रथम त एक-अर्कालाई भने ।

[3] अनि जब सोच-विचार गरे त जानीहाले कि यो आपदाग्रस्त तथा ध्वस्त बगैंचा हाम्रै हो, जसलाई अल्लाहले हाम्रा कर्तुतका प्रतिफलस्वरुप यस्तो गरिदिएको छ तथा वास्तवमा यो हाम्रो दुर्भाग्य हो ।

[4] केही ज्ञाताहरूले यहाँ तस्बीहको अर्थ "इन्शा अल्लाह" भन्नु लिएका छन् ।

[5] अर्थात् अब उनीहरूलाई प्रतीत भयो कि हामीले आफ्ना पिताको तरीकाहरूका विपरीत काम गरेर गल्ती गरेका छौं, जसको दण्ड अल्लाहले हामीलाई दिएको छ । यसबाट यो पनि ज्ञात भयो कि पापको संकल्प तथा त्यसका लागि आरम्भिक कार्य पनि पापकै समान अपराध हो जसमा पकड हुनसक्छ, केवल त्यो इरादा क्षम्य छ जो मनोगतिको सीमासम्म रहन्छ ।

[6] भनिन्छ कि उनीहरूले आपसमा यो संकल्प गरे कि अब यदि अल्लाहले हामीलाई धन दियो भने आफ्ना पिताका समान गरीब तथा दरिद्रहरूलाई पनि भाव दिनेछौं । यसकारण पश्चाताप तथा क्षमा याचनाका साथ आफ्ना प्रभुसित आशाहरू पनि सम्बन्धित गरे ।

प्रभुसित नै कामना (आशा) राख्दछौं ।

كَذٰلِكَ الْعَذَابُ ؕ وَلَعَذَابُ الْاٰخِرَةِ اَكْبَرُ ۘ لَوْ كَانُوْا يَعْلَمُوْنَ ﴿٣٣﴾

(३३) यसैप्रकार प्रकोप आउँछ[1] तथा परलोकको प्रकोप बहुत ठूलो छ । काश ! उनलाई बुद्धि हुन्थ्यो ।[2]

اِنَّ لِلْمُتَّقِيْنَ عِنْدَ رَبِّهِمْ جَنّٰتِ النَّعِيْمِ ﴿٣٤﴾

(३४) निःसन्देह सदाचारीहरूका लागि उनका प्रभुका पास उपहारहरू भएका स्वर्ग छन् ।

اَفَنَجْعَلُ الْمُسْلِمِيْنَ كَالْمُجْرِمِيْنَ ﴿٣٥﴾

(३५) के हामीले मुसलमानहरूलाई पापीहरूका समान गरिदिनेछौं ?[3]

مَا لَكُمْ ٚ كَيْفَ تَحْكُمُوْنَ ﴿٣٦﴾

(३६) तिमीलाई के भयो, कस्तो निर्णय गरिराखेका छौ ?

اَمْ لَكُمْ كِتٰبٌ فِيْهِ تَدْرُسُوْنَ ﴿٣٧﴾ ۙ

(३७) के तिम्रो पासमा कुनै किताब छ[4] जसमा तिमी पढ्दछौ ?

اِنَّ لَكُمْ فِيْهِ لَمَا تَخَيَّرُوْنَ ﴿٣٨﴾

(३८) कि त्यसमा तिम्रा मनोमानी कुराहरू छन् ?

اَمْ لَكُمْ اَيْمَانٌ عَلَيْنَا بَالِغَةٌ اِلٰى يَوْمِ الْقِيٰمَةِ ۙ اِنَّ لَكُمْ

(३९) अथवा हामीसित तिमीले केही यस्ता सौगन्धहरू लिएका छौ जो कयामत (प्रलयका दिन) सम्म रहोस् कि तिम्रा लागि त्यो सबै हो, जो तिमी

[1]अर्थात् अल्लाहका आदेशको विरोध तथा अल्लाहद्वारा दिइएको मालमा कन्जुसी गर्नेहरूको प्रतिफल हामी संसारमा यसैप्रकार दिन्छौ । (यदि हामी चाहन्छौं)

[2]किन्तु खेदको विषय छ कि उनी यस तथ्यलाई बुझ्दैनन्, यसकारण यसको वास्ता गर्दैनन् ।

[3]मक्काका मुश्रिकले भन्दथे कि यदि प्रलय भयो भने त्यहाँ पनि हामी मुसलमानहरूभन्दा राम्रा नै हुनेछौं, जस्तो संसारमा मुसलमानहरूभन्दा अधिक सुखी छौं । अल्लाहले उनका उत्तरमा भने कि यो कसरी सम्भव छ कि हामी मुसलमानहरूलाई अर्थात् आफ्ना आज्ञाकारीहरूलाई अपराधीहरू अर्थात् अवज्ञाकारीहरूको समान गरिदेऔं । अभिप्राय हो कि यो कहिल्यै हुन सक्दैन कि अल्लाहले न्याय एवं औचित्यका विपरीत दुबैलाई समान गरिदेओस् ।

[4]जसमा यो कुरा लेखिएको होस् जसको तिमीले दावा गरिराखेका छौ कि त्यहाँ पनि तिम्रा लागि त्यो कुरो हुनेछ जसलाई तिमी चाहन्छौ ?

لِمَا تَحْكُمُونَ ۞

आफूतिरबाट निर्धारित गर्दछौं ?[1]

سَلْهُمْ أَيُّهُم بِذَٰلِكَ زَعِيمٌ ۞

(४०) उनीहरूसित सोध कि उनीहरूमध्ये को यस कुराको उत्तरदायी (एवं दावेदार) छ ।[2]

أَمْ لَهُمْ شُرَكَاءُ فَلْيَأْتُوا بِشُرَكَائِهِمْ إِن كَانُوا صَادِقِينَ ۞

(४१) के उनका केही साझेदार छन् ? त आ-आफ्ना साझेदारहरूलाई लिएर आऊन् यदि यिनीहरू साँचो छन् ।[3]

يَوْمَ يُكْشَفُ عَن سَاقٍ وَيُدْعَوْنَ إِلَى السُّجُودِ فَلَا يَسْتَطِيعُونَ ۞

(४२) जुन दिन पिंडुला खोल्दिइनेछ तथा सज्दा गर्नका लागि बोलाइनेछन् त (सज्दा) गर्नसक्ने छैनन् ।[4]

خَاشِعَةً أَبْصَارُهُمْ تَرْهَقُهُمْ ذِلَّةٌ ۖ وَقَدْ كَانُوا يُدْعَوْنَ إِلَى السُّجُودِ

(४३) उनका आँखा तल झुकेका हुन्छन् तथा उनीमाथि अपमान (तथा अनादर) आक्षादित भइराखेको



[1]अथवा हामीले तिमीलाई दृढ वचन दिएका छौं, जो क़ेयामतमा शेष रहनेवाला छ कि तिम्रा लागि केही कुरा हुनेछ जसका तिमीले आफ्ना सम्बन्धमा निर्णय गर्नेछौ ।

[2]कि त्यसले केयामतका दिन उनका लागि त्यही निर्णय गर्नेछ जो अल्लाहले मुसलमानहरूका लागि गर्नेछ ।

[3]अथवा जसलाई उनीहरूले अल्लाहको साक्षी बनाएका छन्, तिनीहरूले उनको सहायता गरेर उनलाई राम्रो स्थान दिलाउनेछ ? यदि उनका साझेदार यस्ता छन् भने उनीहरूलाई अगाडि ल्याऊन ताकि उनको सच्चाई स्पष्ट होस् ।

[4]केही धार्मिक विदहरूले पिंडौला खोल्नुको अर्थ केयामतका कठिनाईहरू तथा भयानकता लिएका छन्, किन्तु एक सहीह हदीसमा यसको व्याख्या यसप्रकार वर्णित भएको छ कि क़ेयामतका दिन अल्लाहले आफ्नो पिंडौला खोल्नेछ (जस्तो उसको महिमाका योग्य छ) त प्रत्येक मोमिन पुरुष तथा स्त्री उसका अगाडि सजदामा नत्मस्तक हुनेछन् । उनीहरूले सजदा गर्न चाहनेछन् तर उनको ढाडको हड्डी तख्ताका समान बन्नेछ जसका कारण उनको झुक्नु असंम्भव हुनेछ । (सहीह बुख़ारी, तफ़सीर सुर: नून वल क़लम) अल्लाहले यो पिंडौला कसरी खोल्नेछ तथा यो कसरी हुनेछ ? यो हामी न जान्न सक्छौं न वर्णन गर्न सक्दछौं । यसकारण जुनप्रकार कुनै उपमा बिना हामीले उसका कान, आँखा तथा हात आदिमा विश्वास राख्दछौं, यस्तै पिंडलीको कुरा पनि कुर्आन तथा हदीसमा छ । जुनप्रकार उपमा बिना विश्वास राख्नु आवश्यक छ । यही सलफ़ एवं मोहद्देसीन (हदीसका विशेषज्ञहरू) को मत छ ।

وَهُمْ سٰلِمُوْنَ ﴿٤٣﴾

हुनेछ[1] हाँलाकि यिनी सजदाका लागि (त्यस समय पनि) बोलाइन्थे जब दुरुस्त-चुस्त थिए ।[2]

فَذَرْنِيْ وَمَنْ يُّكَذِّبُ بِهٰذَا الْحَدِيْثِ ۭ سَنَسْتَدْرِجُهُمْ مِّنْ حَيْثُ لَا يَعْلَمُوْنَ ﴿٤٤﴾

(४४) त मलाई तथा यस कुरालाई झुठ्लाउनेवालालाई छोड्दिनुस्[3] हामीले उनीहरूलाई यसप्रकार विस्तारै-विस्तारै तान्नेछौं कि उनीहरूलाई ज्ञात पनि हुनेछैन ।[4]

وَاُمْلِيْ لَهُمْ ۭ اِنَّ كَيْدِيْ مَتِيْنٌ ﴿٤٥﴾

(४५) तथा मैले उनीहरूलाई ढील (छुट), दिरहेको छु । निःसन्देह मेरो योजना बडो दृढ छ ।[5]

اَمْ تَسْـَٔــلُهُمْ اَجْرًا فَهُمْ مِّنْ مَّغْرَمٍ مُّثْقَلُوْنَ ﴿٤٦﴾

(४६) के तिमी उनीबाट कुनै पारिश्रमिक चाहन्छौ, जसका भारले यिनी थिचिदै जान्छन् ।[6]

اَمْ عِنْدَهُمُ الْغَيْبُ فَهُمْ يَكْتُبُوْنَ ﴿٤٧﴾

(४७) अथवा के उनका पास परोक्षका ज्ञान छ जसलाई उनीहरू लेख्दछन् ।[7]

[1]अर्थात् संसारका विपरीत उनको मामिला हुनेछ । संसारमा अभिमान तथा घमण्डले उनका गर्दनहरू अकडेका (साह्रो) हुन्थे ।

[2]अर्थात् स्वस्थ तथा शक्तिवान थिए । अल्लाहको उपासनामा कुनै कुरो उनका लागि बाध्य थिएन, किन्तु संसारमा अल्लाहको उपासनाबाट टाढा रहे ।

[3]अर्थात् म नै उनीसित निपट्नेछु । तिमी त्यसको चिन्ता नगर ।

[4]यो त्यसै ढील (मोहलत) दिनुको वर्णन हो जसलाई कुर्आनमा अनेक स्थानहरूमा वर्णित गरिएको छ तथा हदीसमा पनि स्पष्ट गरिएको छ कि अवज्ञाका बावजूद धन तथा साधनको प्राचुर्य अल्लाहको दया होइन, त्यसबाटै अवसर दिनुका नियमको परिणाम हो । अनि जब त्यो पकड्न चाहन्छ त कोही बचाउनेवाला हुँदैन ।

[5]यो विगत विषयमा नै बल हो । كَيْدٌ (कैदुन्) गुप्त उपाय तथा षडयन्त्रलाई भन्दछन् । राम्रो उद्देश्यका लागि छ भने नराम्रो हुँदैन ।

[6]यो सम्बोधन नबी सल्लल्लाहु अलैहि वसल्लमलाई छ । किन्तु झपार उनलाई गरिदैछ जो तपाईंमाथि ईमान स्वीकार गरिराखेका थिएनन् ।

[7]अर्थात् के परोक्ष (अदृश्य) को ज्ञान उनको पासमा छ । लौहे महफूज (सुरक्षित पुस्तिका) उनका अधिकारमा छ कि त्यसमा जुन कुरा चाहन्छन् लेख्दछन्, यसकारण यिनी तिम्रो आज्ञापालन तथा तिमीमाथि ईमान स्वीकार्नुको आवश्यकता बुझ्दैनन् । यसको उत्तर यो हो कि होइन, यस्तो छैन ।

فَاصْبِرْ لِحُكْمِ رَبِّكَ وَلَا تَكُنْ كَصَاحِبِ الْحُوتِ إِذْ نَادَىٰ وَهُوَ مَكْظُومٌ ﴿٤٨﴾

(४८) त तसर्थ तिमी आफ्ना प्रभुका आदेशको धैर्यले (प्रतीक्षा गर)[1] तथा माछावालाको जस्तो नहुनजाउ, जबकि उसले दु:खको अवस्थामा पुकाऱ्यो ।[2]

لَوْلَا أَنْ تَدَارَكَهُ نِعْمَةٌ مِنْ رَبِّهِ لَنُبِذَ بِالْعَرَاءِ وَهُوَ مَذْمُومٌ ﴿٤٩﴾

(४९) यदि उसलाई त्यसका प्रभुको कृपाले नपाएको भए त नि:सन्देह त्यो नराम्रो अवस्थामा बाँझो धर्तीमा फ्याँकिने थियो ।[4]

فَاجْتَبَاهُ رَبُّهُ فَجَعَلَهُ مِنَ الصَّالِحِينَ ﴿٥٠﴾

(५०) त त्यसलाई त्यसका प्रभुले फेरि निर्वाचित गऱ्यो[5] तथा उसलाई सदाचारीहरूमध्ये गरिदियो ।[6]

وَإِنْ يَكَادُ الَّذِينَ كَفَرُوا لَيُزْلِقُونَكَ

(५१) तथा निकट छ कि (यी) काफिर आफ्ना

---

[1] فَاصْبِرْ मा अक्षर 'फ़ा' यो भन्नको लागि छ कि हे नबी जब वास्तवमा यस्तो छैन त रिसालत (सन्देश पुऱ्याउने) का कर्तव्य पूरा गर्दैरह तथा यी झुठ्लाउनेहरूका सन्दर्भमा अल्लाहका निर्णयको प्रतीक्षा गर ।

[2] जसले आफ्नो जातिका झुठ्लाउने आचरणलाई हेर्दै उत्ताउलोपनसित काम लिए तथा प्रभुका निर्णय बिना नै स्वयं आफ्नो जातिलाई छाडि निस्केर गए ।

[3] जसका परिणामस्वरुप उनलाई माछाको पेटमा जबकि उनी भोक तथा चिन्ताले ग्रस्त थिए आफ्ना प्रभुलाई सहायताका लागि पुकार्नु पऱ्यो । जस्तो कि विवरण पहिला गुज्रिसकेको छ ।

[4] अर्थात् यदि अल्लाह तआलाले उनीहरूलाई क्षमा-याचना तथा विनयको सन्मति नदिएको भए तथा उनको प्रार्थना स्वीकार नगरेको भए त उनलाई सागर तटका साटो जहाँ उनलाई छायाँ एवं आहारको लागि लतादार वृक्ष उमरियो, कुनै बाँझो भूमिमा फ्याँकिदिइन्थ्यो तथा अल्लाहका समीप उनको हैसीयत पनि निन्दित रहन्थ्यो, जबकि प्रार्थनाको स्वीकृतिका पश्चात उनी प्रशंसनीय भए ।

[5] यसको अभिप्राय यो भयो कि उनलाई शक्तिशाली तथा स्वस्थ गर्नुका पश्चात पुन: रिसालतबाट सम्मानित गरेर उनलाई आफ्नो जातितिर पठाइयो, जस्तो कि सूर: सफ्फ़ात १४६ बाट पनि स्पष्ट छ ।

[6] यसकारण रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि "कसैले यो नभनोस् कि म यूनुस पुत्र मत्ताभन्दा उत्तम छु" (सहीह मुस्लिम, किताबुल फ़जाएल बाबुन फ़ी जिक्रे यूनुस .....) तथा विशेष हेर्नुस् सूर:बकर:को आयत नं. २५३ को व्याख्या ।

بِأَبْصَارِهِمْ لَمَّا سَمِعُوا الذِّكْرَ وَيَقُولُونَ إِنَّهُ لَمَجْنُونٌ ۝٥١

(तीव्र) दृष्टिले तपाईंलाई चिप्ल्याइदेऊन्[1] जतिखेर कुर्आन सुन्छन्, तथा भनिदिन्छन् कि यो त निश्चित रुपमा दीवाना हो ।[2]

وَمَا هُوَ إِلَّا ذِكْرٌ لِّلْعَالَمِينَ ۝٥٢

(५२) तथा वास्तवमा यो (कुर्आन) त अखिल जगतवालाहरूका लागि पूर्ण शिक्षा नै हो ।[3]

## सूरतुल हाक़्क़:-६९

سُورَةُ الْحَاقَّةِ

सूर:हाक़्क़ मक्कामा अवतरित भएको यसमा ५२ आयतहरू तथा दुई रुकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

الْحَاقَّةُ ۝١

(१) सिद्ध हुनेवाली ।[4]

[1]अर्थात् यदि तिमीलाई अल्लाहको सहायता तथा सुरक्षा प्राप्त नभएको भए यी काफ़िरहरूको ईर्ष्यापूर्ण आँखाले तिमी नराम्रो दृष्टिको शिकार हुनजान्थ्यौ, अर्थात् तिमीहरूलाई उनको आँखा लाग्थ्यो । इमाम इब्ने क़सीरले यसको यही भावार्थ वर्णन गर्नुभएको छ । विशेष लेख्नुहुन्छ कि यो यस कुराको प्रमाण हो कि आँखा लाग्नु तथा अल्लाहको आज्ञाले त्यसको असरहरूमाथि प्रभावकारी हुनु सत्य हो । जस्तो कि अनेक हदीसहरूबाट पनि सिद्ध छ । तथा हदीसहरूमा त्यसबाट बच्नका लागि प्रार्थनाहरूको वर्णन पनि छ । तथा यो पनि भनिएको छ कि तिमीलाई कुनै कुरा राम्रो लाग्छ भने ماشاء الله (माशाअल्लाह) अथवा بارك الله (बारकल्लाह) भन्नेगर ताकि त्यसलाई नज़र नलागोस् । यस्तै कसैलाई आँखा लाग्दछ भने भन्नुभो कि त्यसलाई स्नान गराएर त्यसको जल उसमाथि हालियोस् जसलाई उसको आँखा लागेको छ । (विस्तारका लागि हेर्नुस् तफ़सीर इब्ने क़सीर तथा हदीसका पुस्तकहरू) केही ज्ञाताहरूले यसको भावार्थ यो गरेका छन् कि यिनी तिमीलाई धनको प्रचार गर्नबाट मोडिदिन्थे ।

[2]अर्थात् ईर्ष्याका रुपमा पनि तथा यस आशयले पनि कि मानिस यस कुर्आनबाट प्रभावित नहोऊन बरु त्यसबाट टाढा नै रहून् । अर्थात् आँखाले पनि यी काफ़िर नबी सल्लल्लाहु अलैहि वसल्लमलाई क्षति पुऱ्याउनुका प्रयास गर्दथे तथा जिब्रोले पनि उहाँलाई दु:ख पुऱ्याउँथे तथा उहाँका हृदयलाई आहत गर्दथे ।

[3]जब तथ्य यो छ कि यो कुर्आन जिन्न तथा मानिसहरूका मार्गदर्शन तथा निर्देशका लागि आए त यसलाई ल्याउने तथा वर्णन गर्नेवाला उन्मुक्त (दीवाना) कसरी हुनसक्छ ?

[4]यो प्रलयका नामहरूमध्ये एउटा नाम हो । यसमा अल्लाहको आदेश सिद्ध हुनेछ अथवा यो

ٱلْحَآقَّةُ مَا ٱلْحَآقَّةُ ۝٢

(२) के हो व्याप्त (सिद्ध) हुनेवाली ।[1]

وَمَآ أَدْرَىٰكَ مَا ٱلْحَآقَّةُ ۝٣

(३) तथा तिमीलाई के थाहा छ कि त्यो सिद्ध हुनेवाली के हो ?[2]

كَذَّبَتْ ثَمُودُ وَعَادٌۢ بِٱلْقَارِعَةِ ۝٤

(४) त्यस चर्को स्वर तथा कोलाहल दिनेवालीलाई समूद तथा आदहरूले भुठ्याइदिएका थिए ।[3]

فَأَمَّا ثَمُودُ فَأُهْلِكُوا۟ بِٱلطَّاغِيَةِ ۝٥

(५) (जसका परिणाम स्वरुप) समूद त अत्यन्त तीब्र (एवं भयानक उच्च) ध्वनिबाट नष्ट गरिदिइए ।[4]

وَأَمَّا عَادٌ فَأُهْلِكُوا۟ بِرِيحٍ صَرْصَرٍ عَاتِيَةٍ ۝٦

(६) तथा आद तीब्र गतिको विनाशकारी आँधीबेरीबाट नष्ट गरिदिइए ।[5]

---

स्वयं पनि हुनेवाला छ, यसकारण यसलाई अलहाक्क:बाट व्यञ्जित गरियो ।

[1]यो शाब्दिक रुपले प्रश्न हो किन्तु यसको आशय प्रलयको महत्व तथा गम्भीरताको वर्णन गर्नु हो ।

[2]अर्थात कुन माध्यमबाट यसलाई पूर्ण वास्तविकताको ज्ञान होस् ? अभिप्राय यसका ज्ञानको इन्कार हो । मानौं तिमीलाई यसको ज्ञान छैन, किनकि तिमीले त्यसलाई अहिले देखेका छौ न त्यसको भयानकताको दर्शन गरेका छौ । मानौ त्यो सृष्टिका ज्ञानको परिधिबाट बाहिर छ । (फ़तहुल क़दीर) केही ज्ञाताहरू भन्छन् कि कुरआन जसका सन्दर्भमा भूतको रुप مَا أَدْرَاكَ प्रयोग गरिएको छ, त्यसलाई वर्णन गरिदिएको छ तथा जसलाई भविष्यको रुप وَمَا يُدْرِيكَ का द्वारा वर्णन गरिएको छ, त्यसको ज्ञान मानिसहरूलाई दिइएको छैन । (फ़तहुल क़दीर तथा ऐसरुत्तफ़ासीर)

[3]यसमा केयामतलाई चर्को स्वर दिनेवाली भनिएको छ किनकि त्यसले आफ्नो भयानकताको मानिसहरूलाई जागृत गरिदिनेछ ।

[4] طَاغِيَةٌ यस्तो ध्वनि जसको सीमा उल्लंघन गर्छ । अर्थात् अति भयावह तथा उच्च ध्वनिले समूदका समुदायलाई विनष्ट गरियो, जस्तो कि पहिला अनेक स्थानहरूमा गुज्रयो ।

[5] صَرْصَر (सरसर) ठूलो बतास (ठूलो गतिको हावा), عَاتِيَةٌ (आतियह:) उद्दण्ड, कसैको वशमा नआउनेवाली । अर्थात् अति तीब्र तथा प्रचण्ड, आँधीकाद्वारा ईशदूत हूद अलैहिस्सलामको जाति आदलाई नष्ट गरियो ।

| | |
|---|---|
| (७) जसलाई उनीमाथि निरन्तर सात रात तथा आठ दिनसम्म (अल्लाहले) लगाइराख्यो[1] त तिमी देख्दथ्यौ कि यिनीहरू धर्तीमा यसप्रकार पछारिएका छन् जस्तो खजूरका खोक्रो तना (रुखहरू) हुन् ।[2] | سَخَّرَهَا عَلَيْهِمْ سَبْعَ لَيَالٍ وَثَمَٰنِيَةَ أَيَّامٍ حُسُومًا فَتَرَى ٱلْقَوْمَ فِيهَا صَرْعَىٰ كَأَنَّهُمْ أَعْجَازُ نَخْلٍ خَاوِيَةٍ ۝٧ |
| (८) त के उनीहरूमध्ये कोही पनि तिमीलाई शेष देखिदैछ ? | فَهَلْ تَرَىٰ لَهُم مِّنۢ بَاقِيَةٍ ۝٨ |
| (९) फिरऔन तथा त्यसभन्दा पूर्वका मानिस एवं जसका वस्तीहरू पल्टाइए[3], उनीहरूले पनि त्रुटिहरू (पाप) गरे । | وَجَآءَ فِرْعَوْنُ وَمَن قَبْلَهُۥ وَٱلْمُؤْتَفِكَٰتُ بِٱلْخَاطِئَةِ ۝٩ |
| (१०) तथा आफ्ना प्रभुका सन्देष्टाको अवज्ञा गरे, (अन्ततः) अल्लाहले उनीहरूलाई (पनि) पकडमा लिइहाल्यो ।[4] | فَعَصَوْا۟ رَسُولَ رَبِّهِمْ فَأَخَذَهُمْ أَخْذَةً رَّابِيَةً ۝١٠ |
| (११) जब पानीमा बाढी आयो त[5] त्यस समय हामीले तिमीलाई डुङ्गामा चढाइहाल्यौं ।[6] | إِنَّا لَمَّا طَغَا ٱلْمَآءُ حَمَلْنَٰكُمْ فِى ٱلْجَارِيَةِ ۝١١ |

[1] حُسُمٌ (हसम) को अर्थ काट्नु तथा अलग अलग गरिदिनु हो तथा केही ज्ञाताहरूले حُسُومًا को अर्थ निरन्तर गरेका छन् ।

[2]यसबाट उनका शारीरिक आकारको लम्बाइतिर पनि संकेत छ خَاوِيَةٌ (खावेयह) खोक्रो, निर्जीव शरीरलाई खोक्रो बोटसित उपमा दिएको छ ।

[3]यसबाट लूतको जाति अभिप्राय छ ।

[4] رَابِيَةٌ या رَبَا يَرْبُو बाट छ, जसको अर्थ अधिक हो, अर्थात् उनको यस्तो पकड गऱ्यो जो अन्य समुदायहरूको पकडभन्दा अधिक अर्थात् सबभन्दा कडा थियो । मानौं أَخْذَةً رَابِيَةً को भावार्थ भयो अति कडा पकड ।

[5]अर्थात् पानीले ऊचाईमा सीमा उल्लंघन गऱ्यो अर्थात् पानी निकै माथि पुग्यो ।

[6] كُم सित सम्बोधित नबी सल्लल्लाहु अलैहि वसल्लमका मानिस हुन् । मतलब यो हो कि तिमी जुन पूर्वजका पुस्ताबाट हौ हामीले उनलाई डुङ्गामा सवार गराई उचाईमा पुगेको पानीबाट बचाएरका थियौं । الجارِيَة सित मुराद नूह अलैहिस्सलामको नाव (डुङ्गा) हो ।

لِنَجْعَلَهَا لَكُمْ تَذْكِرَةً وَتَعِيَهَآ أُذُنٌ وَٰعِيَةٌ ﴿١٢﴾

(१२) ताकि त्यसलाई तिम्रा लागि शिक्षाप्रद (तथा यादगार) बनाइदिऊँ[1] तथा (ताकि) याद राख्नेहरू कान त्यसलाई याद राखून्।[2]

فَإِذَا نُفِخَ فِى ٱلصُّورِ نَفْخَةٌ وَٰحِدَةٌ ﴿١٣﴾

(१३) त जब नरसिंघामा एउटा फूँक फुकिनेछ।[3]

وَحُمِلَتِ ٱلْأَرْضُ وَٱلْجِبَالُ فَدُكَّتَا دَكَّةً وَٰحِدَةً ﴿١٤﴾

(१४) तथा धर्ती एवं पर्वत उचालिनेछन्[4] तथा एकै पटकमा कण-कण बनाइनेछन्।

فَيَوْمَئِذٍ وَقَعَتِ ٱلْوَاقِعَةُ ﴿١٥﴾

(१५) त्यसदिन घटित हुने घटना (प्रलय) हुनेछ।

وَٱنشَقَّتِ ٱلسَّمَآءُ فَهِىَ يَوْمَئِذٍ وَاهِيَةٌ ﴿١٦﴾

(१६) तथा आकाश फाटिनेछ त त्यसदिन अत्यन्त क्षीण हुन जानेछ।[5]

وَٱلْمَلَكُ عَلَىٰٓ أَرْجَآئِهَا ۚ وَيَحْمِلُ عَرْشَ رَبِّكَ فَوْقَهُمْ

(१७) र त्यसका किनारहरूमा फरिश्ताहरू हुनेछन्[6] तथा तिम्रा प्रभुको अर्श (आसन) त्यस दिन आठ

[1]अर्थात् यो कार्य कि काफ़िरहरूलाई जलमग्न पारिदियौं तथा मोमिनहरूलाई डुङ्गामा चढाएर बचायौं, तिम्रा लागि त्यसलाई शिक्षा तथा सदुपदेश बनाइदियौं ताकि त्यसबाट शिक्षा ग्रहण गर तथा अल्लाहको अवज्ञाबाट बच।

[2]अर्थात् सुन्नेहरू त्यसलाई सुनेर याद राखून् तथा तिनी पनि त्यसबाट शिक्षा प्राप्त गरुन्।

[3]झुठ्लाउनेहरूको परिणाम वर्णन गर्नुका पश्चात अब भनिंदैछ कि यो الحاقة (हुने कुरो) कसरी हुनेछ इस्राफ़ीलको एउटै फूँकले त्यो व्याप्त हुनेछ।

[4]अर्थात् आफ्ना स्थानहरूबाट उचालिनेछन् तथा अल्लाहका सामर्थ्यले आफ्ना स्थानहरूबाट उखेलिनेछ।

[5]अर्थात् त्यसमा बल तथा दृढता कसरी रहनेछैन जुन कुरो फाटेर खण्ड-खण्ड हुनजान्छ त्यसमा दृढता कसरी रहनसक्छ।

[6]अर्थात् आकाश त खण्ड-खण्ड हुनेछन् अनि आकाशीय सृष्टि फरिश्ताहरू कहाँ रहनेछन् ? भन्यो, उनी आकाशहरूका किनारामा हुनेछन्। यसको एउटा अभिप्राय यो हुनसक्छ कि फरिश्ताहरू आकाश फुट्नुका पूर्व अल्लाहका आदेशले धर्तीमा आउनेछन् त मानौं उनी धर्तीका किनारमा हुनेछन्, अथवा यो अभिप्राय हुनसक्छ कि आकाश टूट-फूट भएर अनेक खण्डहरूमा हुनेछ त ती खण्डहरूमा जो धर्तीका किनारमा तथा आफ्नो ठाउँमा स्थित हुनेछन् तिनीमाथि हुनेछन् (फ़तहुल क़दीर)

يَوْمَئِذٍ ثَمَٰنِيَةٌ ﴿١٧﴾

फरिश्ता आफूमाथि उचालेका हुनेछन् ।[1]

يَوْمَئِذٍ تُعْرَضُونَ لَا تَخْفَىٰ مِنكُمْ خَافِيَةٌ ﴿١٨﴾

(१८) त्यसदिन तिमी सबै अगाडि प्रस्तुत गरिनेछौ,[2] तिम्रो कुनै रहस्य लुकेको हुनेछैन ।

فَأَمَّا مَنْ أُوتِيَ كِتَٰبَهُۥ بِيَمِينِهِۦ فَيَقُولُ هَآؤُمُ ٱقْرَءُوا۟ كِتَٰبِيَهْ ﴿١٩﴾

(१९) त जसको कर्मपत्र त्यसका दाहिना हातमा दिइनेछ[3] त त्यसले भन्नथाल्नेछ कि ल मेरो कर्मपत्र पढ ।[4]

إِنِّى ظَنَنتُ أَنِّى مُلَٰقٍ حِسَابِيَهْ ﴿٢٠﴾

(२०) मलाई त पूर्ण विश्वास थियो कि म आफ्नो हिसाब पाउनेवाला छु ।[5]

فَهُوَ فِى عِيشَةٍ رَّاضِيَةٍ ﴿٢١﴾

(२१) त त्यो एउटा सुखद जीवनमा हुनेछ ।

فِى جَنَّةٍ عَالِيَةٍ ﴿٢٢﴾

(२२) उच्च एवं (भव्य) स्वर्गमा ।[6]

[1]अर्थात् यी विशेष फरिश्ताहरूले अल्लाहका अर्श (आसन) लाई आफ्ना टाउकोमा उचालेका हुनेछन् । यो पनि सम्भव छ कि यस अर्शसित अभिप्राय त्यो अर्श छ जो निर्णयका लागि धर्तीमा राखिनेछ जसमाथि अल्लाहको अवतरण हुनेछ । (इब्ने क़सीर)

[2]यो पेशी यसकारण हुनेछैन कि अल्लाह जसलाई जान्दैन तिनलाई जानीहालोस्, त्यो त सबैलाई जान्दछ । यो पेशी स्वयं मानिसहरूमाथि तर्क स्थापित गर्नका लागि हुनेछ अन्यथा अल्लाहबाट कुनै कुरा लुकेको छैन ।

[3]जो त्यसका सौभाग्य, मुक्ति तथा सफलताको प्रमाण हुनेछ ।

[4]अर्थात् त्यसले प्रसन्न भएर प्रत्येकसित भन्नेछ कि लिनुस् मेरो कर्मपत्र पढ, मेरो कर्मपत्र त मलाई प्राप्त भइसकेको छ । यसकारण कि त्यसलाई थाहा हुनेछ कि त्यसमा उसको पुण्य नै पुण्य हुनेछ । केही दोष छन् भने अल्लाहले तिनलाई क्षमा गरिदिनेछ अथवा ती दोषहरूलाई पनि पुण्यमा बदलिदिएको हुनेछ । जस्तो कि अल्लाह तआ़ला ईमानवालाहरूसँग दया तथा कृपाका यी विभिन्न रुप अपनाउनेछ ।

[5]अर्थात् परलोकका हिसाब-किताबमाथि मलाई पूर्ण विश्वास थियो ।

[6]स्वर्गमा विभिन्न श्रेणीहरू हुनेछन् । प्रत्येक श्रेणीका बीच ठूलो दूरी हुनेछ । जस्तो मोजाहिदीनका बारेमा नबी सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो, "स्वर्गमा सय श्रेणीहरू छन् जो अल्लाहका मोजाहिदीनका लागि तयार गरिएका छन् । दुई श्रेणीहरूका बीच आकाश तथा धर्ती जतिको दूरी हुनेछ ।" (सहीह मुस्लिम किताबुल इमारः, सहीह बुख़ारी किताबुल जिहाद)

قُطُوفُهَا دَانِيَةٌ ۝٢٣

(२३) जसमा फल झुलिएर झुकेका हुनेछन् ।[१]

كُلُوا وَاشْرَبُوا هَنِيٓـًٔا بِمَآ أَسْلَفْتُمْ فِى الْأَيَّامِ الْخَالِيَةِ ۝٢٤

(२४) (उनीसित भनिनेछ) कि आनन्दसँग खाउ, पिउ आफ्ना ती कर्महरूका प्रतिफल स्वरुप जो तिमीले पूर्व कालमा गर्‍यौ ।[२]

وَأَمَّا مَنْ أُوتِىَ كِتَٰبَهُۥ بِشِمَالِهِۦ فَيَقُولُ يَٰلَيْتَنِى لَمْ أُوتَ كِتَٰبِيَهْ ۝٢٥

(२५) परन्तु जसलाई त्यसको कर्मपत्र बायाँ हातमा दिइनेछ, त्यसले त भन्नेछ कि हाय मलाई मेरो कर्मपत्र नदिएको भए ।[३]

وَلَمْ أَدْرِ مَا حِسَابِيَهْ ۝٢٦

(२६) तथा मलाई थाहा नभएको भए कि हिसाब के हो (उत्तम हुन्थ्यो) ।[४]

يَٰلَيْتَهَا كَانَتِ الْقَاضِيَةَ ۝٢٧

(२७) काश ! मृत्युले (मेरो) काम नै समाप्त गरिदिएको भए ।[५]

مَآ أَغْنَىٰ عَنِّى مَالِيَهْ ۝٢٨

(२८) मेरो धनले पनि मलाई कुनै लाभ दिएन ।

هَلَكَ عَنِّى سُلْطَٰنِيَهْ ۝٢٩

(२९) मेरो अधिपत्य पनि मबाट जाँदैरह्यो ।[६]

خُذُوهُ فَغُلُّوهُ ۝٣٠

(३०) (आदेश हुनेछ) त्यसलाई समात अनि त्यसलाई तौक् (बाध्नु) पहिराइदेउ ।

[१]अर्थात् अति समीप हुनेछन् अर्थात् कोही पल्टेको अवस्थामा टिप्न सक्नेछ । قُطُوف बहुवचन हो قِطْفٌ को, चुनिएका अथवा तोडिएका अभिप्राय फल हो ما يُقطَفُ مِن الثمار

[२]अर्थात् संसारमा पुण्यको कर्म गरे । यो स्वर्ग उनको प्रतिकार हो ।

[३]किनकि कर्मपत्र बायाँ हातमा पाउनु दूर्भाग्यको लक्षण हुनेछ ।

[४]अर्थात् मलाई नभनेकै राम्रो हुन्थ्यो किनकि पूरा हिसाब त्यसका प्रतिकूल हुनेछ ।

[५]अर्थात् मृत्यु नै निर्णायक हुन्थ्यो तथा पुनः जीवित गरिन्थ्यो ताकि यो नराम्रो दिन देख्नु पर्दैनथ्यो ।

[६]अर्थात् जस्तो मेरो माल काम आएन, मान-मर्यादा तथा आधिपत्य एवं राज्य पनि मेरो काम आएन । आज म एक्लो नै यहाँ दण्ड भोग्नुमा विवश छु ।

| | |
|---|---|
| (३१) अनि त्यसलाई नरकमा हालिदेउ ।[1] | ثُمَّ الْجَحِيمَ صَلُّوهُ ﴿٣١﴾ |
| (३२) त्यस पश्चात त्यसलाई यस्तो जंजीरमा जसको नाप सत्तरी हातको छ, जकडिदेउ ।[2] | ثُمَّ فِي سِلْسِلَةٍ ذَرْعُهَا سَبْعُونَ ذِرَاعًا فَاسْلُكُوهُ ﴿٣٢﴾ |
| (३३) नि:सन्देह यसले अल्लाह महानमाथि ईमान राख्दैनथ्यो ।[3] | إِنَّهُ كَانَ لَا يُؤْمِنُ بِاللَّهِ الْعَظِيمِ ﴿٣٣﴾ |
| (३४) तथा निर्धनलाई खुवाउनमा प्रोत्साहित गर्दैनथ्यो ।[4] | وَلَا يَحُضُّ عَلَىٰ طَعَامِ الْمِسْكِينِ ﴿٣٤﴾ |
| (३५) तसर्थ आज यहाँ उसको कोही मित्र छैन । | فَلَيْسَ لَهُ الْيَوْمَ هَاهُنَا حَمِيمٌ ﴿٣٥﴾ |
| (३६) तथा न पीपका अतिरिक्त उसको कुनै भोजन छ ।[5] | وَلَا طَعَامٌ إِلَّا مِنْ غِسْلِينٍ ﴿٣٦﴾ |
| (३७) जसलाई पापीहरूका अतिरिक्त कसैले खाने छैन ।[6] | لَا يَأْكُلُهُ إِلَّا الْخَاطِئُونَ ﴿٣٧﴾ |
| (३८) त मलाई सौगन्ध छ ती वस्तुहरूको जसलाई तिमी देख्दछौ । | فَلَا أُقْسِمُ بِمَا تُبْصِرُونَ ﴿٣٨﴾ |

[1]यो अल्लाह तआलाले नरकका फरिश्ताहरूलाई आदेश दिनेछ ।

[2]यो ذراع जिराअ (हात) कसको हात हुनेछ, तथा कति हुनेछ ? यसको व्याख्या सम्भव छैन । तैपनि यसबाट यति ज्ञात भयो कि जंजीरको लम्बाई सत्तरी हात हुनेछ ।

[3]यो उपरोक्त यातनाको कारण अथवा अपराधीका अपराधको वर्णन हो ।

[4]अर्थात् इबादत तथा अनुपालनकाद्वारा अल्लाहको हक पूरा गर्दैनथ्यो न दायित्व जो भक्तहरूको भक्तहरूमाथि छ । मानौ ईमान भएकाहरूमा यो कुरा हुन्छ कि तिनी अल्लाहका हक् तथा भक्तहरूका हक् दुबैलाई पूरा गर्दछन् ।

[5]केही धर्मविद भन्दछन् कि यो नरक्मा कुनै वृक्ष छ । केही अन्य भन्दछन् कि ज़क्कूम मलाई नै यहाँ 'गिसलीन' भनिएको छ । तथा केही ज्ञाताहरू भन्दछन् कि यो नरकवासीहरूको पीप अथवा उनका शरीरबाट हामीलाई त्यसबाट शरणमा राखोस् ।

[6] خاطئون सित अभिप्राय नरकवासी छ, जो कुफ्र तथा शीर्कका कारण नरक्मा प्रवेश गर्नेछन् किनकि यही यस्तो पाप हो जो नरक्मा सधै रहनुको कारण हो ।

| | |
|---|---|
| (३९) तथा ती वस्तुहरूको जसलाई तिमी देख्दैनौ ।[1] | وَمَا لَا تُبْصِرُونَ ﴿٣٩﴾ |
| (४०) कि निःसन्देह यो (कुर्आन) प्रतिष्ठित सन्देष्टाको कथन हो ।[2] | إِنَّهُ لَقَوْلُ رَسُولٍ كَرِيمٍ ﴿٤٠﴾ |
| (४१) यो कुनै कविको कथन होइन,[3] (अफसोच) तिमीले निकै कम विश्वास राख्दछौ । | وَمَا هُوَ بِقَوْلِ شَاعِرٍ ۚ قَلِيلًا مَّا تُؤْمِنُونَ ﴿٤١﴾ |
| (४२) तथा न कुनै ज्योतिषिको कथन हो[4] (अफसोच) तिमीले निकै कम शिक्षा ग्रहण गरिराखेका छौ ।[5] | وَلَا بِقَوْلِ كَاهِنٍ ۚ قَلِيلًا مَّا تَذَكَّرُونَ ﴿٤٢﴾ |
| (४३) (यो त) अखिल जगतका प्रभुबाट अवतरित गरिएको हो ।[6] | تَنزِيلٌ مِّن رَّبِّ الْعَالَمِينَ ﴿٤٣﴾ |

[1]अर्थात् अल्लाहद्वारा पैदा गरिएका वस्तुहरू जो अल्लाहका अस्तित्व तथा सामर्थ्य एवं शक्तिको प्रतीक हो, जसलाई तिमीले देख्दछौ अथवा देख्दैनौ । ती सबैको सौगन्ध छ अगाडि सौगन्धको उत्तर छ ।

[2]प्रतिष्ठित रसूलसित तात्पर्य मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम हुनुहुन्छ तथा कथनसित अभिप्राय पढ्नु हो, अर्थात् सम्मानित रसूलबाट पढ्नु । अथवा कथनसित ताथ्पर्य यस्तो कथन हो जो यो प्रतिष्ठित रसूल अल्लाहको तर्फबाट तिमीलाई पुऱ्याउँदछ, किनकि कुर्आन रसूल अथवा जिब्रीलको कथन होइन । अपितु अल्लाहको कथन हो जो उसले फरिश्ताद्वारा पैगम्बरमाथि उतारेको छ, अनि पैगम्बरले त्यसलाई मानिसहरूसम्म पुऱ्याउँछ ।

[3]जस्तो कि तिमी बुझ्दछौ तथा भन्दछौ किनकि यो न कविताका प्रकारहरूमा छ न त त्यसका समान छ । अनि यो कुनै कविको कथन कसरी हुनसक्छ ?

[4]जस्तो कि कहिलेकाहीं तिमीले यो दावा पनि गर्दछौ जबकि कहानत (ज्योतिष) पनि एउटा अन्य वस्तु हो ।

[5]'कमी' दुबै ठाउँमा नहुनुका अर्थमा छ । अर्थात् तिमी कुर्आनमा न ईमान स्वीकार गर्दछौ न त्यसबाट शिक्षा ग्रहण गर्दछौ ।

[6]अर्थात् रसूलका मुखबाट भनिएका यो कथन सर्वलोकका प्रभुबाट अवतरित गरिएको हो । तिमीले त्यसलाई कहिले कविता तथा कहिले ज्योतिषको कथन भनेर झुठ्लाउँछौ ?

وَلَوْ تَقَوَّلَ عَلَيْنَا بَعْضَ الْأَقَاوِيلِ ﴿٤٤﴾

(४४) तथा यदि यसले हामीमाथि कुनै कुरा रच्थ्यो ।[1]

لَأَخَذْنَا مِنْهُ بِالْيَمِينِ ﴿٤٥﴾

(४५) त अवश्य हामीले त्यसको दाहिने हात समातिहाल्थ्यौं[2]

ثُمَّ لَقَطَعْنَا مِنْهُ الْوَتِينَ ﴿٤٦﴾

(४६) अनि त्यसका हृदयको नशा काटिदिन्थ्यौं ।[3]

فَمَا مِنْكُمْ مِنْ أَحَدٍ عَنْهُ حَاجِزِينَ ﴿٤٧﴾

(४७) त्यसपछि तिमीमध्ये कसैले पनि (मलाई) त्यसबाट रोक्नेवाला हुन्नथ्यो ।[4]

وَإِنَّهُ لَتَذْكِرَةٌ لِلْمُتَّقِينَ ﴿٤٨﴾

(४८) निःसन्देह यो (कुर्आन) सदाचारीहरूका लागि शिक्षा छ ।[5]

[1]अर्थात् आफ्नो तर्फबाट गढेर हामीसित सम्बन्धित गर्दथ्यो, अथवा त्यसमा घटी-बढी गर्दथ्यो त तुरुन्त हामीले त्यसको पकड गर्दथ्यौं तथा त्यसलाई मोहलत दिन्नथ्यौं जस्तो कि आगामी आयतहरूमा भन्यो ।

[2]अथवा दायाँ हातबाट त्यसको पकड गर्दथ्यौ, किनकि दायाँ हातले पकड कडा हुन्छ तथा अल्लाहका त दुबै हात नै सिधा छन्, जस्तो कि हदीसमा छ ।

[3]ध्यान रहोस् कि यो यातना विशेषगरी आदरणीय नबी सल्लल्लाहु अलैहि वसल्लमको सन्दर्भमा आएको छ जसको उद्देश्य उहाँको सत्यता देखाउनु हो । यसमा यो नियम भनिएको छैन कि जसले पनि नबूअतको झुठा दावा गर्नेछ त नबूअतका झुठा दावेदारलाई हामीले तुरुन्त दण्ड दिनेछौं । अतः यसबाट कुनै झुठा नबीलाई सच्चा नबी भन्न सकिन्न कि त्यो संसारमा अल्लाहको यातनाबाट सुरक्षित रह्यो । घटनाहरू पनि साक्षी छन् कि अनेक मानिसहरूले नबूअतका झूठा दावा गरे तथा अल्लाहले उनलाई मोहलत दियो तथा उनी सांसारिक पकडबाट साधारणतः सुरक्षित नै रहे । यसकारण यदि यसलाई नियम मानिन्छ भने अनेक नबूअतका झुठा दावेदारहरूलाई 'सच्चा नबी' मान्नुपर्नेछ ।

[4]यसबाट विदित भयो कि महा ईशदूत मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम अल्लाहका सत्य दूत हुनुहुन्थ्यो, जसलाई अल्लाहले दण्ड दिएन, बरु प्रमाण, चमत्कार एवं आफ्ना विशेष समर्थन तथा सहायताले उहाँलाई सम्मानित गऱ्यो ।

[5]किनकि यसबाट तिनैले लाभ प्राप्त गर्दछन्, अन्यथा पवित्र कुर्आन त सबैको शिक्षाका लागि आएको छ ।

وَإِنَّا لَنَعْلَمُ أَنَّ مِنكُم مُّكَذِّبِينَ ﴿٤٩﴾

(४९) तथा हामीलाई पूर्व ज्ञान छ कि तिमीहरू मध्य केही त्यसका झुठ्लाउनेवालाहरू छन्।

وَإِنَّهُ لَحَسْرَةٌ عَلَى الْكَافِرِينَ ﴿٥٠﴾

(५०) निःसन्देह (यो झुठ्लाउनु) काफ़िरहरूका लागि पश्चाताप हो।[1]

وَإِنَّهُ لَحَقُّ الْيَقِينِ ﴿٥١﴾

(५१) तथा निःसन्देह यो विश्वसनीय सत्य हो।[2]

فَسَبِّحْ بِاسْمِ رَبِّكَ الْعَظِيمِ ﴿٥٢﴾

(५२) त तिमीले आफ्ना महिमावान प्रभुको पवित्रताको वर्णन गर।[3]

## सूरतुल मआरिज-७०

سُورَةُ الْمَعَارِجِ

सूरः मआरिज़ मक्कामा अवतरित भएको यसमा चौवालिस आयतहरू तथा दुई रुकूअ छन्।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ।

سَأَلَ سَائِلٌ بِعَذَابٍ وَاقِعٍ ﴿١﴾

(१) एउटा माँग गर्नेवालाले[4] त्यस प्रकोपको

[1]अर्थात् क़ेयामतका दिन यसमा पछुतो गर्नेछन् कि काश हामीले क़ुर्आनलाई नझुठ्लाएको भए। अथवा यो क़ुर्आन स्वयं उनका पश्चातापको कारण हुनेछ जब उनी ईमानवालाहरूलाई क़ुर्आनको पुण्य प्राप्त भएको देख्नेछन्।

[2]अर्थात् क़ुर्आनको अल्लाहको तर्फबाट हुनु निश्चित छ, यसमा बिल्कुल कुनै सन्देहको स्थान छैन अथवा क़ेयामतका विषयमा जुन सूचना दिइराखिएको छ त्यो सर्वथा सत्य तथा साँचो हो।

[3]जसले क़ुर्आन जस्तो महान किताब अवतरित गर्‍यो।

[4]भनिन्छ कि यो नज़र पुत्र हारिस अथवा अबू जहल थियो, जसले भनेको थियो।

﴿اللَّهُمَّ إِن كَانَ هَٰذَا هُوَ الْحَقَّ مِنْ عِندِكَ فَأَمْطِرْ عَلَيْنَا حِجَارَةً مِّنَ السَّمَاءِ﴾

"हे अल्लाह यदि यो तिम्रो तर्फबाट सत्य नै छ भने हामीमाथि आकाशबाट ढुङ्गा वर्षाऊ।" (अल-अन्फ़ाल-३२)

जस्तो कि यो व्यक्ति बद्रका रणमा मारियो। केही ज्ञाताहरू भन्छन् कि यसबाट तात्पर्य रसूलुल्लाह सल्लल्लाहु अलैहि वसल्लम हुनुहुन्छ जसले आफ्ना समुदायलाई श्राप दिएका थिए, तथा त्यसका परिणामस्वरुप मक्कावासीहरूमाथि अकाल आइपरेको थियो।

لِّلْكٰفِرِيْنَ لَيْسَ لَهٗ دَافِعٌ ۙ﴿٢﴾

माग गऱ्यो जो (स्पष्टत:) हुनेवाला छ ।

(२) काफ़िरहरूमाथि जसलाई कोही हटाउनेवाला छैन ।

مِّنَ اللّٰهِ ذِى الْمَعَارِجِ ؕ﴿٣﴾

(३) त्यस अल्लाहको तर्फबाट भऱ्याङहरूवाला छ ।[1]

تَعْرُجُ الْمَلٰٓئِكَةُ وَالرُّوْحُ اِلَيْهِ فِىْ يَوْمٍ كَانَ مِقْدَارُهٗ خَمْسِيْنَ اَلْفَ سَنَةٍ ۚ﴿٤﴾

(४) जसतिर फरिश्ताहरू तथा रुह चढ्दछन्[2] एक दिनमा जसको अवधि पचास हजार वर्षको छ ।[3]

[1]अथवा पदहरूवाला, उचाईहरूवाला छ, जसतिर फरिश्ताहरू उक्लिन्छन् ।

[2]रुह (आत्मा) सित अभिप्राय जिब्रील (फरिश्ता) हुन्, उनको प्रधानताका कारण उनको अलग विशेषरुपले वर्णन गरिएको छ, अन्यथा फरिश्ताहरूमा उनी पनि सम्मिलित छन् । अथवा रुहसित अभिप्राय मानवीय आत्माहरू हुन् जो मृत्युका पश्चात आकाशमा लगिन्छन्, जस्तो कि केही रिवायतहरू (हदीसहरू) मा छन् ।

[3]त्यस दिनका निर्धारणमा निकै मतभेद छ, जस्तो कि अलिफ.लाम.मीम अस्सजदाका आरम्भमा हामीले वर्णन गरेर आएका छौं । यहाँ इमाम इब्ने कसीरले चार कथन लेखेका छन् । प्रथम कथन छ कि यसबाट त्यो दूरी अभिप्राय हो जो विशाल अर्श (ईश्वरीय सिंहासन) बाट पाताल (धर्तीका सातौं परत) सम्म छ । यो दूरी पचास हजार वर्षको यात्राको छ । दोस्रो कथन छ कि यो संसारको पूरा अवधि छ सृष्टिका आरम्भबाट प्रलय घटित हुनेसम्म । यसमध्ये कति अवधि व्यतीत भयो तथा कति शेष छ, यसलाई मात्र अल्लाह तआला नै जान्दछ । तेस्रो कथन यो छ कि यो लोक तथा परलोकका मध्येको दूरी हो । चौथो कथन यो छ कि यो क़ेयामतको दिनका मात्रा हो । अर्थात् काफ़िरहरूका लागि हिसाबको दिन पचास हजार वर्षको जस्तो भारी हुनेछ, किन्तु मोमिनका लागि संसारमा एक फर्ज़ (अनिवार्य) नमाज़ पढ्नुभन्दा पनि संक्षिप्त हुनेछ । (मुसनद अहमद ३/७५) इमाम इब्ने कसीरले यसै कथनलाई प्राथमिकता दिनुभएको छ, किनकि हदीसमा ज़कात (धर्मदान) नतिर्नेवालालाई प्रलयका दिन जुन यातना दिइनेछ त्यसको चर्चा गर्दै रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो:

«حَتَّى يَحْكُمَ اللهُ بَيْنَ عِبَادِهِ، فِي يَوْمٍ كَانَ مِقْدَارُهُ خَمْسِينَ أَلْفَ سَنَةٍ مِمَّا تَعُدُّونَ»

"यहाँसम्मकि अल्लाहले आफ्ना भक्तहरूका बीच निर्णय गरिदिनेछ तथा यस्तो दिनमा जसको अवधि तिम्रो गन्तीका अनुसार पचास हजार वर्ष हुनेछ ।" (सहीह मुस्लिम किताबुज़ ज़कात, बाबु इस्मे मानेइज़ ज़कात)

| | |
|---|---|
| (५) त तिमी राम्रो तरीकाले धैर्य राख । | فَاصْبِرْ صَبْرًا جَمِيلًا ﴿٥﴾ |
| (६) नि:सन्देह यिनीहरू त्यस (प्रकोप) लाई टाढा ठानिराखेका छन् । | إِنَّهُمْ يَرَوْنَهُ بَعِيدًا ﴿٦﴾ |
| (७) तथा हामीले त्यसलाई निकट नै देख्दछौं ।[1] | وَنَرَاهُ قَرِيبًا ﴿٧﴾ |
| (८) जुन दिन आकाश तेलको तलछटको जस्तो हुनेछ । | يَوْمَ تَكُونُ السَّمَاءُ كَالْمُهْلِ ﴿٨﴾ |
| (९) तथा पर्वतहरू रङ्गीन उनका समान हुनेछन् ।[2] | وَتَكُونُ الْجِبَالُ كَالْعِهْنِ ﴿٩﴾ |
| (१०) तथा कुनै मित्रले कुनै मित्रलाई सोध्ने छैन । | وَلَا يَسْأَلُ حَمِيمٌ حَمِيمًا ﴿١٠﴾ |
| (११) (यद्यपि) एक-अर्कालाई देखाइनेछन्[3] पापीले त्यस दिनको यातनाका साटो प्रतिदानमा आफ्ना पुत्रहरूलाई दिन चाहनेछ । | يُبَصَّرُونَهُمْ ۚ يَوَدُّ الْمُجْرِمُ لَوْ يَفْتَدِي مِنْ عَذَابِ يَوْمِئِذٍ بِبَنِيهِ ﴿١١﴾ |
| (१२) आफ्ना पत्नीलाई तथा आफ्ना भाइलाई । | وَصَاحِبَتِهِ وَأَخِيهِ ﴿١٢﴾ |
| (१३) एवं आफ्ना परिवारलाई जसले त्यसलाई शरण दिन्थ्यो । | وَفَصِيلَتِهِ الَّتِي تُؤْوِيهِ ﴿١٣﴾ |
| (१४) तथा धर्तीका सबै मानिसहरूलाई, ताकि यिनी उनले त्यसलाई मुक्ति दिलाउन सकून् ।[4] | وَمَنْ فِي الْأَرْضِ جَمِيعًا ثُمَّ يُنْجِيهِ ﴿١٤﴾ |

यस व्याख्या अनुसार فِي يَوْمٍ को सम्बन्ध عذاب (यातना) सित हुनेछ, अर्थात् त्यो घटित हुने यातना क़यामत (प्रलय) का दिन हुनेछ, जो काफ़िरहरूका लागि पचास हजार वर्षका समान हुनेछ ।

[1] टाढाबाट अभिप्राय असम्भव तथा निकटसित त्यो निश्चय घटित हुनु हो, अर्थात् काफ़िर प्रलयलाई असम्भव ठान्दछन् तथा मुसलमानहरूको विश्वास छ कि त्यो आएर रहनेछ, यसकारण कि كُلُّ مَا هُوَ آتٍ فَهُوَ قَرِيبٌ "प्रत्येक आगामी वस्तु समीप छ ।"

[2] अर्थात् धुनिसकेको कपासका समान जस्तै सूरतुल क़ारिआमा छ ﴿كَالْعِهْنِ الْمَنْفُوشِ﴾ ।

[3] किन्तु प्रत्येकलाई आ-आफ्नै पीर हुनेछ, यसकारण परिचय तथा पहिचानका उपरान्त एक-अर्कालाई सोध्ने छैनन् ।

[4] अर्थात् सन्तान, पत्नी, भाई तथा परिवार मानिसलाई अति प्रिय हुन्छन् । परन्तु

كَلَّا ۖ إِنَّهَا لَظَىٰ ﴿١٥﴾

(१५) (परन्तु) कदापि यो हुने छैन। निःसन्देह त्यो ज्वाला भएको अग्नि हो ।[1]

نَزَّاعَةً لِّلشَّوَىٰ ﴿١٦﴾

(१६) जो मुख तथा टाउकोको छाला निकाल्नेवाली छ ।[2]

تَدْعُو مَنْ أَدْبَرَ وَتَوَلَّىٰ ﴿١٧﴾

(१७) त्यसले प्रत्येक त्यस व्यक्तिलाई पुकार्नेछ जो पछि हट्दछ तथा मुख फर्काउँछ ।

وَجَمَعَ فَأَوْعَىٰ ﴿١٨﴾

(१८) तथा एकत्रित गरी सम्हालेर राख्छ ।[3] (कमजोर हृदय भएको)

إِنَّ الْإِنسَانَ خُلِقَ هَلُوعًا ﴿١٩﴾

(१९) निःसन्देह मनुष्य अत्यन्त कम धैर्यवाला बनाइएको छ ।[4]

إِذَا مَسَّهُ الشَّرُّ جَزُوعًا ﴿٢٠﴾

(२०) जब त्यसलाई कष्ट पुग्दछ त हडबडाउँछ ।

---

केयामत (प्रलय) का दिन अपराधीले चाहनेछ कि यी प्रिय वस्तुहरू त्यसबाट प्रतिदानमा स्वीकार गरियून् तथा त्यसलाई मुक्त गरिदिइयोस् । فَصِيلَة फसील:, परिवारलाई भन्दछन्, किनकि यो कबीलाबाट अलग हुन्छ ।

[1]अर्थात् त्यो नरक, यो त्यसको घोर तपनको वर्णन हो ।

[2]अर्थात् मासु तथा छालालाई जलाएर राखिदिन्छ । मानिस मात्र हड्डीहरूको ढाँचा रहनेछ ।

[3]अर्थात् जो संसारमा सत्यबाट पिठ्यूँ फर्काउन्छ तथा विमुख हुन्छ तथा धन एकत्र गरेर ख़जानामा जतन गरेर राख्दछ, उसले न अल्लाहका मार्गमा न त्यसमध्येबाट ज़कात (धर्मदान) निकाल्दथ्यो । अल्लाह तआलाले नरकलाई बोलाउनुको शक्ति प्रदान गर्नेछ तथा त्यो आफ्ना मुखले बोल्नेछ तथा यस्ता मानिसहरूलाई पुकारेर भन्नेछ जसका कर्महरूका प्रतिफल स्वरुप नरक अनिवार्य हुनेछ । केही धर्मविद भन्दछन् कि पुकार्ने त फरिश्ता नै हुनेछन् किन्तु त्यसलाई नरकतिर सम्बन्धित गरिदिएको छ । केही अन्य भन्दछन् कि कसैले पुकार्ने छैन, यो केवल रुपक स्वरुप यस्तो भनिएको छ । अभिप्राय यो हो कि उक्त व्यक्तिहरूको आवास नरक हुनेछ ।

[4]अत्यन्त लोभी तथा निकै रुनेवालालाई هَلُوع (हलूअ) भनिन्छ, जसलाई अनुवादमा कमजोर हृदय भएको भनिएको छ, किनकि यस्तो व्यक्ति नै कन्जूस, लोभी तथा अति रुने चिच्याउनेवाला हुन्छ । त्यसको गुण भनिएको छ ।

وَإِذَا مَسَّهُ الْخَيْرُ مَنُوعًا ﴿٢١﴾

(२१) तथा जब सुख प्राप्त हुन्छ त कन्जुसी गर्नथाल्छ ।

إِلَّا الْمُصَلِّينَ ﴿٢٢﴾

(२२) परन्तु ती नमाज़ी

الَّذِينَ هُمْ عَلَىٰ صَلَاتِهِمْ دَائِمُونَ ﴿٢٣﴾

(२३) जो आफ्ना नमाज़मा नियमितता (राख्नेहरू छन् ।)

وَالَّذِينَ فِي أَمْوَالِهِمْ حَقٌّ مَّعْلُومٌ ﴿٢٤﴾

(२४) तथा जसका धनमा निर्धारित भाग छ ।[२]

لِّلسَّائِلِ وَالْمَحْرُومِ ﴿٢٥﴾

(२५) माँग्नेहरूको पनि तथा प्रश्न गर्नबाट बच्नेहरूको पनि ।[३]

وَالَّذِينَ يُصَدِّقُونَ بِيَوْمِ الدِّينِ ﴿٢٦﴾

(२६) तथा जो न्यायका दिनमा विश्वास राख्दछन् ।[४]

وَالَّذِينَ هُم مِّنْ عَذَابِ رَبِّهِم مُّشْفِقُونَ ﴿٢٧﴾

(२७) तथा जो आफ्ना प्रभुका प्रकोपबाट तर्सदै रहन्छन् ।[५]

---

[१]अभिप्राय हो सम्पूर्ण मोमिन एकेश्वरवादी । उनीहरूमा उक्त नैतिक क्षीणता हुँदैन । अपितु यसका विपरीत ती सद्गुणहरूका रुपमा हुन्छन् । नित्य नमाज़ पढ्नुको अर्थ हो उनीहरु नमाज़मा आलस्य गर्दैनन् । उनीहरु प्रत्येक नमाज़ त्यसका समयमा वडो पाबन्दी (नियमित पढ्दछन्) कुनै कार्यले उनीहरूलाई नमाज़बाट रोक्दैन तथा कुनै सांसारिक लाभले उनीहरूलाई नमाज़बाट विमुख गर्दैन ।

[२]अर्थात् अनिवार्य ज़कात (धर्मदान) । केही धर्मविद्का निकट यो साधारण हो, यसमा अनिवार्य तथा ऐच्छिक दुबै दान सम्मिलित छन् ।

[३]محروم (महरुम) मा त्यो व्यक्ति पनि सम्मिलित छ जो जीविकाबाट नै वञ्चित छ, त्यो पनि जो कुनै आकाशीय अथवा सांसारिक आपदाको मारमा आएर आफ्नो पूँजीबाट वञ्चित भयो तथा त्यो पनि जो आवश्यकता हुनुका बावजूद नमाँग्नुका कारण मानिसहरूका दान-दक्षिणाबाट बञ्चित रहन्छ ।

[४]अर्थात् उनी न त्यसको इन्कार गर्दछन् न त्यसमा शंका तथा सन्देहको प्रदर्शन ।

[५]अर्थात् आज्ञापालन तथा सत्कर्महरूका उपरान्त अल्लाहको महानता तथा प्रतापका कारण त्यसको पकडबाट भयभीत तथा कम्पित रहन्छन्, तथा विश्वास राख्दछन् कि जबसम्म अल्लाहको दया हामीमाथि हुँदैन, हाम्रा यी कर्म मोक्षका लागि पर्याप्त हुँदैन । जस्तो कि यस भावार्थको हदीस पहिला गुज्रिसकेको छ ।

إِنَّ عَذَابَ رَبِّهِمْ غَيْرُ مَأْمُونٍ ﴿٢٨﴾

(२८) निःसन्देह उनका प्रभुको प्रकोप निर्भय हुने कुरा छैन ।[1]

وَالَّذِينَ هُمْ لِفُرُوجِهِمْ حَافِظُونَ ﴿٢٩﴾

(२९) तथा जो मानिस आफ्ना गुप्ताङ्गहरूको (अवैधबाट) रक्षा गर्दछन् ।

إِلَّا عَلَىٰ أَزْوَاجِهِمْ أَوْ مَا مَلَكَتْ أَيْمَانُهُمْ فَإِنَّهُمْ غَيْرُ مَلُومِينَ ﴿٣٠﴾

(३०) परन्तु उनका पत्नी एवं दासीहरूका विषयमा जसका उनीहरू स्वामी छन्, ती निन्दित छैनन् ।[2]

فَمَنِ ابْتَغَىٰ وَرَاءَ ذَٰلِكَ فَأُولَٰئِكَ هُمُ الْعَادُونَ ﴿٣١﴾

(३१) अब जोसुकै यसका अतिरिक्त (मार्ग) खोज्नेछ, त यस्ता मानिस सीमा उल्लंघन गर्नेहरूमा हुनेछन् ।

وَالَّذِينَ هُمْ لِأَمَانَاتِهِمْ وَعَهْدِهِمْ رَاعُونَ ﴿٣٢﴾

(३२) तथा जो आफ्ना अमानत (नाशो) को तथा आफ्ना वचन एवं प्रतिज्ञाको ध्यान राख्दछन् ।[3]

وَالَّذِينَ هُمْ بِشَهَادَاتِهِمْ قَائِمُونَ ﴿٣٣﴾

(३३) तथा जो आफ्ना गवाही (साक्ष्य) मा सोझा (तथा अडिग) रहन्छन् ।[4]

[1]यो उपरोक्त विषयमा बल दिनका लागि छ कि अल्लाहको यातनाबाट कसैलाई निर्भय हुनुहुँदैन, अपितु प्रत्येक समय त्यसलाई तर्सिरहनु तथा त्यसबाट बचावको यथासम्भव उपाय अपनाउनुपर्छ ।

[2]अर्थात् मानिसको कामवासनाको तृप्तिका लागि अल्लाहले दुई वैध माध्यम राख्नु भएको छ, एउटा पत्नी, दोस्रो दासी । वर्तमान युगमा दासीको कुरा इस्लामले भनेको नीतिका अनुसार लगभग समाप्त भइसकेको छ, तैपनि वैधानिक रुपले त्यसलाई यसकारण समाप्त गरिएको छैन कि भविष्यमा यदि यस्तो स्थिति उत्पन्न हुन्छ भने यसबाट लाभ उठाउन सकिन्छ । जे पनि होस् ईमान भएकाहरूको एउटा विशेषता यो पनि हो कि कामवासनाको उनीहरू पूर्ति तथा तृप्तिका लागि अवैध साधन अपनाउँदैनन् ।

[3]अर्थात् उनका पासमा मानिसहरूको जो अमानत (धरोहर) हुन्छ त्यसमा विश्वासघात गर्दैनन् तथा मानिसहरूसित जो प्रतिज्ञा (वचन) गर्दछन् तिनलाई तोड्दैनन्, अपितु उनको ख्याल राख्दछन् ।

[4]अर्थात् त्यसलाई सही-सही निर्वाह गर्दछन् चाहे त्यसको मारमा उनको निकट सम्बन्धी नै किन नआऊन् । यसका अतिरिक्त त्यसलाई लुकाउँदैनन्, न त्यसमा परिवर्तन नै गर्दछन् ।

وَالَّذِينَ هُمْ عَلَىٰ صَلَاتِهِمْ يُحَافِظُونَ ﴿٣٤﴾

(३४) तथा जो आफ्ना नमाज़हरूको सुरक्षा गर्दछन् ।

أُولَٰئِكَ فِي جَنَّاتٍ مُّكْرَمُونَ ﴿٣٥﴾

(३५) यिनीहरू नै स्वर्गमा आदर (एवं सम्मान) वाला हुनेछन् ।

فَمَالِ الَّذِينَ كَفَرُوا قِبَلَكَ مُهْطِعِينَ ﴿٣٦﴾

(३६) त काफ़िरहरूलाई के भएको छ कि उनी तिमीतिर दगुर्छन् ।

عَنِ الْيَمِينِ وَعَنِ الشِّمَالِ عِزِينَ ﴿٣٧﴾

(३७) दायाँ तथा बायाँबाट समूहका समूह ।[1]

أَيَطْمَعُ كُلُّ امْرِئٍ مِّنْهُمْ أَن يُدْخَلَ جَنَّةَ نَعِيمٍ ﴿٣٨﴾

(३८) के उनीहरूमध्ये प्रत्येकको इच्छा यो छ कि उनीहरू सुख-सुविधा भएको स्वर्गमा प्रवेश पाउनेछन् ?

كَلَّا ۖ إِنَّا خَلَقْنَاهُم مِّمَّا يَعْلَمُونَ ﴿٣٩﴾

(३९) (यस्तो) कदापि हुनेछैन[2] हामीले उनीहरूलाई (त्यस वस्तु) बाट पैदा गरेका छौं जसलाई तिनीहरू जान्दैनन् ।[3]

فَلَا أُقْسِمُ بِرَبِّ الْمَشَارِقِ وَالْمَغَارِبِ إِنَّا لَقَادِرُونَ ﴿٤٠﴾

(४०) त मलाई सौगन्ध छ पूर्व एवं पश्चिमहरू[4] का प्रभुको (कि) हामी निश्चित रुपले सामर्थ्यवान छौं ।

[1]यो नबी सल्लल्लाहु अलैहि वसल्लमका युगका काफ़िरहरुको चर्चा हो कि उनी उहाँ सल्लल्लाहु अलैहि वसल्लमको मजलिस (सभा) मा दगुरी-दगुरी आउँथे, किन्तु उहाँका कुराहरू सुनेर अनुपालन गर्नुका साटो तिनको परिहास गर्दथे तथा टोलीहरूमा विभक्त हुनजान्थे तथा दावा यो गर्दथे कि यदि मुसलमान स्वर्गमा गए भने हामी उनीभन्दा पहिला स्वर्गमा जानेछौं । अल्लाहले आगामी आयतमा उनका यस भ्रमको खण्डन गऱ्यो ।

[2]अर्थात् यो कसरी हुनसक्छ कि मोमीन् तथा काफिर दुवै स्वर्गमा जाऊन् रसूलका अनुयायी तथा विरोधी दुवैलाई परलोकको सुख प्राप्त हुन्छ, यस्तो कदापि सम्भव छैन ।

[3]अर्थात् مَاءٍ مَّهِينٍ (हीन थोपा) बाट । जब यो कुरो छ त के अहंकार मानिसलाई शोभा दिन्छ जसका कारणले नै उनीहरूले अल्लाह तथा त्यसका रसूललाई झुठ्याउँछन् पनि ?

[4]प्रत्येक दिन सूर्य अलग-अलग स्थानबाट उदाउँछ तथा अलग-अलग स्थानमा अस्त हुन्छ । यस आधारमा पूर्व पनि धेरै छन् परिश्चम पनि त्यतिकै । विवरणका लागि सूर: साफ्फात ५ हेर्नुस् ।

عَلٰٓى اَنْ نُّبَدِّلَ خَيْرًا مِّنْهُمْ ۙ وَمَا نَحْنُ بِمَسْبُوْقِيْنَ ۝٤١

(४१) यस कुरामा कि उनका ठाउँमा उनीभन्दा राम्रा मानिस ल्याऊँ[1] तथा हामी विवश छैनौं ।[2]

فَذَرْهُمْ يَخُوْضُوْا وَيَلْعَبُوْا حَتّٰى يُلٰقُوْا يَوْمَهُمُ الَّذِىْ يُوْعَدُوْنَ ۝٤٢

(४२) त तपाईं उनीहरूलाई झगड्दै खेल्दै छोड्दिनुस्[3] यहाँसम्मकि यिनीहरू आफ्ना त्यस दिन गएर भेटून्, जसको उनीहरूसित वायदा (वचन) गरिन्छ ।

يَوْمَ يَخْرُجُوْنَ مِنَ الْاَجْدَاثِ سِرَاعًا كَاَنَّهُمْ اِلٰى نُصُبٍ يُّوْفِضُوْنَ ۝٤٣

(४३) जुन दिन कब्रहरू (चिहान) बाट यिनी दगुर्दै निस्कनेछन्, जस्तो कि उनी कुनै थानतिर तीब्र गतिले गइराखेका छन् ।

خَاشِعَةً اَبْصَارُهُمْ تَرْهَقُهُمْ ذِلَّةٌ ۗ ذٰلِكَ الْيَوْمُ الَّذِىْ كَانُوْا يُوْعَدُوْنَ ۝٤٤

(४४) उनका आँखा झुकेका हुनेछन्,[4] उनीमाथि अपमान आच्छादित भइराखेको हुनेछ,[5] यो हो त्यो दिन जसको उनीसित वायदा गरिन्थ्यो ।[7]

---

[1]अर्थात् उनीहरूलाई विलय गरी एउटा नयाँ सृष्टि आवाद गरिदिनुमा हामी समर्थ छौं ।

[2]जब यस्तो छ त के कयामतका दिन हामीले उनीहरूलाई पुनः जीवित गरी उठाउन सक्दैनौं ?

[3]अर्थात् व्यर्थ तथा बेकार विवादहरूमा फँसून् तथा आफ्ना संसारमा मँग्न रहून् । तैपनि तपाईंले धर्म-प्रचारको काम जारी राख्नुस् । उनको आचरणले तपाईंलाई आफ्ना कर्तव्यबाट लापरवाही हतास नगरिदेओस् ।

[4] اَجْدَاث बहुवचन हो । جَدَث को अर्थ कब्र हो । نُصُب अर्थात् स्थान जहाँ देवताहरूका नाममा पशुको बली चढाइन्छ तथा मूर्तिहरूका अर्थमा पनि उपर्युक्त हुन्छ । यहाँ यसै दोस्रो अर्थमा छ । मूर्तिहरूका पुजारी सूर्योदयका समय बडो तीब्र गतिले आफ्ना मूर्तिहरूतिर दगुर्छन् कि कसले सर्वप्रथम तिनीहरूलाई चुम्बन गर्दछ । केही धर्मविद्हरूले यसलाई यहाँ عَلَم को अर्थमा लिन्छन् कि जस्तो संग्राम क्षेत्रमा सैनिक आफ्ना عَلَم (झन्डा) तिर दगुर्छन् । यसैप्रकार कयामत (प्रलय) का दिन कब्रहरूबाट अति तीब्र गतिले निस्कनेछन् । يُوْفِضُوْن यो يُسْرِعُوْن का अर्थमा छ।

[5]जुनप्रकार अपराधीहरूका आँखा झुकेका हुन्छन् किनकि उनीहरूले आफ्ना कर्तुतहरूको ज्ञान हुन्छ ।

[6]अर्थात् घोर अपमानले उनीहरूलाई आफ्नो चपेटामा लिइराखेको हुनेछ तथा त्यसका मुख भयका कारण काला हुनेछन् । यसैबाट غشيه को योग छ जो युवा अवस्थासित निकट हुन्छ, अर्थात् غلامٌ مُراهِقُ الاحْتِلام (फ़तहुल क़दीर)

[7]अर्थात् रसूलहरूका मुखबाट तथा आकाशीय धर्मशास्त्रद्वारा ।

سُورَةُ نُوحٍ

## सूरतु नूह-७१

सूरः नूह मक्कामा अवतरित भएको तथा यसमा अठ्ठाईस आयातहरू एवं दुई रुकूअ छन् ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम
بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

إِنَّآ أَرۡسَلۡنَا نُوحًا إِلَىٰ قَوۡمِهِۦٓ أَنۡ أَنذِرۡ قَوۡمَكَ مِن قَبۡلِ أَن يَأۡتِيَهُمۡ عَذَابٌ أَلِيمٞ ١

(१) निःसन्देह हामीले नूह (अलैहिस्सलाम) लाई उनका समुदायतिर पठायौं[1] कि आफ्ना समुदायलाई तर्साउ (तथा सचेत गर) यसभन्दा पूर्व कि उनका निकट कष्टदायी यातना आओस् ।[2]

قَالَ يَٰقَوۡمِ إِنِّي لَكُمۡ نَذِيرٞ مُّبِينٌ ٢

(२) (नूह अलैहिस्सलामले) भने कि हे मेरा समुदायका मानिसहरू ! म तिमीलाई स्पष्ट रुपमा तर्साउनेवाला हूँ ।[3]

أَنِ ٱعۡبُدُواْ ٱللَّهَ وَٱتَّقُوهُ وَأَطِيعُونِ ٣

(३) कि तिमी अल्लाहको इबादत (उपासना) गर[4] तथा उसैसित तर्स[5] एवं मेरो भनाई मान ।[6]

[1]आदरणीय नूह महान ईशदूतमध्ये हुनुहुन्छ । सहीह मुस्लिम आदिको शफ़ाअत (अभिस्तावना) वाली हदीसमा छ कि यिनी प्रथम ईशदूत हुन् । यो पनि भनिन्छ कि उनैको जातिबाट शिर्क (बहुदेववाद) को आरम्भ भयो । अल्लाह तआलाले (परमेश्वर) उनलाई आफ्नो जातिका मार्गदर्शनका लागि पठायो ।

[2]केयामतका दिन अथवा सांसारिक प्रकोप आउनुभन्दा पहिला जस्तै यस जातिमाथि तूफ़ान आयो ।

[3]अल्लाहको यातनाबाट, यदि तिमीले ईमान स्वीकार गरेनौ । यसैकारण यातनाबाट मुक्तिको नुस्खा (सूत्र) तिमीलाई बतलाउन आएको हूँ, जो अगाडि वर्णन भइराखेको छ ।

[4]तथा शिर्क त्यागदेऊ । केवल एक अल्लाहको इबादत (उपासना) गर ।

[5]अल्लाहको अवज्ञाबाट बच जसबाट तिमी अल्लाहको यातनाका पात्र बन्नसक्छौ ।

[6]अर्थात् मैले तिमीलाई जुन कुराहरूको आदेश दिऊ, त्यसमा मेरो आज्ञापालन गर किनकि म तिमीतिर अल्लाहको रसूल तथा त्यसको प्रतिनिधि बनेर आएको हूँ ।

(४) त त्यसले तिम्रा पाप क्षमा गरिदिनेछ तथा तिमीलाई एउटा निर्धिरित समयसम्म छाडिदिनेछ ।[१] निःसन्देह अल्लाहको वादा जब आउँछ त रोकिँदैन ।[२] काश (यदि) तिमीलाई ज्ञात हुन्थ्यो ।[३]

يَغْفِرْ لَكُم مِّن ذُنُوبِكُمْ وَيُؤَخِّرْكُمْ إِلَىٰٓ أَجَلٍ مُّسَمًّى ۚ إِنَّ أَجَلَ ٱللَّهِ إِذَا جَآءَ لَا يُؤَخَّرُ ۖ لَوْ كُنتُمْ تَعْلَمُونَ ④

(५) (नूहले) भने कि हे मेरा प्रभु ! मैले आफ्ना समुदायलाई रात-दिन तिमीतिर बोलाएको छु ।[४]

قَالَ رَبِّ إِنِّى دَعَوْتُ قَوْمِى لَيْلًا وَنَهَارًا ⑤

(६) परन्तु मैले बोलाउँदा यिनीहरू भाग्नुमा अझै बढ्दै गए ।[५]

فَلَمْ يَزِدْهُمْ دُعَآءِىٓ إِلَّا فِرَارًا ⑥

(७) तथा मैले जुनबेला उनीहरूलाई तिम्रा क्षमादानका लागि बोलाएँ[६] उनीहरूले आफ्ना औंलाहरू आ-आफ्ना

وَإِنِّى كُلَّمَا دَعَوْتُهُمْ لِتَغْفِرَ لَهُمْ جَعَلُوٓا۟ أَصَٰبِعَهُمْ فِىٓ ءَاذَانِهِمْ وَٱسْتَغْشَوْا۟

[१]यसको अर्थ यो हो कि ईमान स्वीकार्नुको स्थितिमा तिम्रो मृत्युको अवधि जो नियमित छ, त्यसलाई हटाएर तिमीलाई अधिक आयु प्रदान गर्नेछ, तथा त्यो प्रकोप तिमीबाट टाढा गरिदिन्छ जो ईमान स्वीकार नगर्नुको दशामा तिम्रो भाग्य थियो । यस आयतबाट तर्क निकाल्दै भनिएको छ कि आज्ञापालन, सदाचार तथा सम्बन्धीहरूका साथ राम्रो व्यवहारले वास्तवमा आयु बढ्दछ । हदीसमा पनि छ صِلَةُ الرَّحِمِ تَزِيدُ فِي العُمُرِ "सम्बन्धितहरूसित सद्व्यवहार आयुका बृद्धिको कारण हो ।" (इब्ने कसीर) केही विद्हरू भन्दछन् हटाउनुको अर्थ बरकत हो) ईमानबाट आयुमा शुभ हुनेछ । ईमान ल्याउँदैनौ (स्वीकार गर्दैनौ) भने यस शुभबाट बञ्चित रहनेछौ ।

[२]अपितु निश्चित रुपमा घटित भएर रहन्छ । अतः तिम्रो भलाई यसैमा छ कि ईमान तथा आज्ञापालनको मार्ग तुरुन्त अपनाइहाल । ढिलो गर्नमा खतरा छ कि अल्लाहका प्रकोपका वचनको लपेटमा न आइहाल ।

[३]अर्थात् यदि तिमीलाई ज्ञान हुन्थ्यो भने तिमीले त्यसलाई अपनाउनमा छिटो गर्दथ्यौ जसको म तिमीलाई आदेश गरिराखेको छु अथवा यदि तिमी यस कुरालाई जान्थ्यौ कि अल्लाहको प्रकोप जब आउँछ त हट्दैन ।

[४]अर्थात् तिम्रो आज्ञाको पालना गर्नुमा बिना आलस्य रात-दिन मैले तिम्रो सन्देश आफ्नो जातिलाई पुऱ्याएको छु ।

[५]अर्थात् मेरो पुकारका कारण यिनीहरू ईमानबाट अझै अधिक टाढा भएका छन् । जब कुनै समुदाय बिचलनका अन्तिम विन्दुमा पुग्दछ त त्यसको यही दशा हुन्छ, त्यसलाई जति अल्लाहतिर बोलाउँछौं, त्यो त्यति नै टाढा भाग्दछ ।

[६]अर्थात् ईमान तथा आज्ञापालनतिर जो कारणका हेतु छ ।

ثِيَابَهُمْ وَأَصَرُّوا وَاسْتَكْبَرُوا اسْتِكْبَارًا ۝٧

कानहरूमा हाले[१] तथा आफ्ना कपडाहरूलाई ओढे[२] एवं अडिए[३] तथा बडो अहंकार गरे।[४]

ثُمَّ إِنِّي دَعَوْتُهُمْ جِهَارًا ۝٨

(८) अनि मैले उनलाई उच्च आवाजले बोलाएँ।

ثُمَّ إِنِّي أَعْلَنْتُ لَهُمْ وَأَسْرَرْتُ لَهُمْ إِسْرَارًا ۝٩

(९) तथा निःसन्देह मैले उनीसित खुलारुपमा पनि भने तथा सुस्तरी भने।[५]

فَقُلْتُ اسْتَغْفِرُوا رَبَّكُمْ إِنَّهُ كَانَ غَفَّارًا ۝١٠

(१०) तथा मैले भने कि आफ्ना प्रभुसित आफ्ना पापहरूको क्षमा गराइहाल।[६](तथा क्षमा माँग) निःसन्देह त्यो बडो क्षमाशील छ।[७]

يُرْسِلِ السَّمَاءَ عَلَيْكُمْ مِدْرَارًا ۝١١

(११) त्यसले तिमीमाथि आकाशबाट निकै वर्षा गर्दै छाडिदिनेछ।[८]

[१]ताकि मेरो आवाज सुन्न नसकून्।

[२]ताकि मुख देख्न नसकून् अथवा आफ्ना टाउकामा कपडा हाले ताकि मेरो कुरा सुन्न नसकून्। यो उनीतिरबाट कडा शत्रुता तथा शिक्षा-दीक्षाबाट निश्चिन्तताको प्रदर्शन हो। केही विदहरू भन्छन् कि आफूलाई कपडाबाट छोप्नु उद्देश्य यो थियो कि पैग़म्बर(संदेष्टा) ले उनलाई चिन्ह नसकून् तथा उनलाई आमन्त्रण स्वीकार गर्नमा बाध्य नगरुन्।

[३]अर्थात् कुफ्र (इन्कार) मा अडिग रहून्, त्यसलाई छोडेनन् तथा पश्चाताप गरेनन्।

[४]सत्यका स्वीकार तथा आज्ञाकापालन गर्नबाट उनीहरूले घोर अहंकार गरे।

[५]अर्थात् विभिन्न रुप तथा ढंगले आमन्त्रण दिएँ। केही अन्य भन्दछन् कि सभा तथा समारोहहरूमा पनि उनीहरूलाई आमन्त्रण गरे तथा घरहरूमा व्यक्तिगत रुपले पनि तिम्रो सन्देश पुऱ्याए।

[६]अर्थात् ईमान तथा आज्ञापालनको पथ अपनाउ तथा आफ्ना प्रभुसित विगत पापहरूको क्षमा माँग।

[७]त्यो तौबा (क्षमा-याचना) स्वीकार गर्नेवाला दयानिधि तथा क्षमावान छ।

[८]केही विद्वान्हरूले यसै आयतका कारण इस्तिसक़ा (वर्षाका लागि) नमाज़मा सूरः नूह पढनलाई राम्रो भनेका छन्। रिवायत छ कि आदरणीय उमर रजीयल्लाहु अन्हु पनि एक पटक इस्तिस्क़ाको नमाज़को लागि मञ्चमाथि चढनुभयो त केवल आयाते इस्तिग़फ़ार, (क्षमायाचनावाली आयतहरू) पढेर मञ्चबाट झर्नुभो, तथा भन्नुभयो कि मैले वर्षालाई वर्षाका ती मार्गहरुबाट माँगेको छु जो आकाशहरुमा छन्,

وَيُمْدِدْكُمْ بِأَمْوَالٍ وَبَنِينَ وَيَجْعَل لَّكُمْ جَنَّاتٍ وَيَجْعَل لَّكُمْ أَنْهَارًا ﴿١٢﴾

(१२) तथा तिमीलाई निकै माल तथा सन्तानमा बढाइदिनेछ तथा तिमीलाई बगैंचा दिनेछ तिम्रा लागि नहरहरू निकालिदिनेछ ।[1]

مَّا لَكُمْ لَا تَرْجُونَ لِلَّهِ وَقَارًا ﴿١٣﴾

(१३) तिमीलाई के भएको छ कि तिमी अल्लाहको सर्वोच्चतामा विश्वास गर्दैनौ ।[2]

وَقَدْ خَلَقَكُمْ أَطْوَارًا ﴿١٤﴾

(१४) यद्यपि उसले तिमीलाई विभिन्न प्रकारले पैदा गरेको छ ।

أَلَمْ تَرَوْا كَيْفَ خَلَقَ اللَّهُ سَبْعَ سَمَاوَاتٍ طِبَاقًا ﴿١٥﴾

(१५) के तिमी देख्दैनौ कि अल्लाह (तआ़ला) ले कसरी माथि सात आकाश पैदा गरिदिएका छन् ।[4]

जसबाट वर्षा धर्तीमा उत्रन्छ । (इब्ने क़सीर) आदरणीय हसन बसरीका सम्बन्धमा भनिन्छ कि उनीसित आएर कसैले अकालको शिकायत गऱ्यो त उनले त्यसलाई इस्तिग़फ़ार (क्षमा-याचना) को निर्देश दिए, कुनै अर्कोले दरिद्रता तथा भोकमरीको गुनासो गऱ्यो त उसलाई पनि यही उपचार भन्नुभयो । एउटा अन्य व्यक्तिले आफ्नो बगैंचा सुक्न अथवा सुक्नुको गुनासो गऱ्यो त त्ससित पनि भन्नुभयो कि क्षमायाचनाको निर्देश किन दिनुभयो ? त उहाँले यही आयत पढेर भन्नुभयो कि मैले आफ्नो तर्फबाट यो कुरा गरेको होइन । यो त्यो उपचार हो जो यी सबैका लागि अल्लाहले भनेको छ । (ऐसरुत्तफ़ासीर)

[1]अर्थात् क्षमा-याचनाबाट तिमीलाई पारलौकिक सुख-सुविधाहरू मात्रै प्राप्त हुँदैनन्, अपितु सांसारिक धन सम्पत्ति तथा पुत्रहरूको अधिकताबाट पनि सुशोभित गरिनेछौ ।

[2]وقار बनेको छ توقیر (तौक़ीर) बाट अर्थात् मर्यादा । तथा رجاء भयका अर्थमा छ, अर्थात् त्यसको मर्यादाका अनुसार त्यससित किन तर्सन्नौ, त्यसलाई एउटा किन मान्दैनौ तथा त्यसको आज्ञापालन किन गर्दैनौ ।

[3]पहिला वीर्य अनि रगतको डल्लो अनि मासुको टुक्रा, त्यसपश्चात हड्डीहरू, मांस र फेरि पूरा पैदाईश, जस्तो कि सूरः अम्बिया ५, अल-मोमिनून्-१४, तथा अल–मोमिन- ६७ आदिमा विवरण गुज्रयो ।

[4]जो त्यसमा सामर्थ्य तथा कारीगरीको निपुणता व्यक्त गर्दछन् तथा यस कुरातिर संकेत गर्दछन् कि उपास्य मात्र त्यही एउटा अल्लाह छ ।

وَّجَعَلَ الْقَمَرَ فِيهِنَّ نُورًا وَّجَعَلَ الشَّمْسَ سِرَاجًا ⑯

(१६) तथा उनीहरूमा चन्द्रमालाई निकै जगमगाउँदो बनाएको छ[१] तथा सूर्यलाई प्रकाशमान दीप बनाएको छ ।[२]

وَاللَّهُ أَنبَتَكُم مِّنَ الْأَرْضِ نَبَاتًا ⑰

(१७) तथा तिमीलाई धर्तीबाट (एउटा विशेष विधिबाट) उमारेको छ[३] (तथा पैदा गरेको छ) ।

ثُمَّ يُعِيدُكُمْ فِيهَا وَيُخْرِجُكُمْ إِخْرَاجًا ⑱

(१८) अनि तिमीलाई त्यसैमा फर्काइ लग्नेछ तथा (एउटा विशेष विधिले) पुन: तिमीलाई निकाल्नेछ ।[४]

وَاللَّهُ جَعَلَ لَكُمُ الْأَرْضَ بِسَاطًا ⑲

(१९) तथा तिम्रा लागि धर्तीलाई अल्लाह (तआला) ले फ़र्श बनाएको छ ।[५]

لِّتَسْلُكُوا مِنْهَا سُبُلًا فِجَاجًا ⑳

(२०) ताकि तिमी त्यसका विस्तृत मार्गहरूमा हिंड्डुल गर ।[६]

[१]जो धर्तीलाई प्रकाशित तथा त्यसका निधारको झूमर छ ।

[२]तांकि मानिसले त्यसका प्रकाशमा जीविका उपार्जनका लागि, जो त्यसको सबभन्दा ठूलो आवश्यकता हो, प्रयास तथा परिश्रम गर्नसकोस् ।

[३]अर्थात् तिम्रा पिता आदम अलैहिस्सलामलाई, जसलाई माटोबाट पैदा गऱ्यो, अनि त्यसमा अल्लाहले आत्मा फुक्यो । अथवा यदि सबै मानव जातिलाई सम्बोधित बुझिन्छ भने अभिप्राय यो हुनेछ कि तिमी जुन वीर्यबाट पैदा हुन्छौ त्यो त्यही आहारबाट बन्दछ जो धर्तीबाट प्राप्त हुन्छ । त्यस आधारमा पनि सबैको उत्पत्ति यसै धर्तीबाट सिद्ध हुन्छ ।

[४]अर्थात् मरेर फेरि त्यसै माटोमा जानुछ अनि प्रलयका दिन त्यसै धर्तीबाट तिमीलाई जीवित पारी निकालिनेछ ।

[५]अर्थात् त्यसलाई फर्श (शय्या) का समान ओछ्याइदिएको छ । तिमी त्यसमा यसरी हिंड्डुल गर्छौ तथा उठ्छौ-बस्छौ जस्तै आफ्नो घरमा ओछ्यानमा ।

[६]سُبُلٌ बहुवचन हो سَبِيلٌ को तथा فِجَاجٌ बहुवचन हो فَجٌّ (विस्तृत मार्ग) को । अर्थात् उसले धर्तीमा ठूला-ठूला विस्तृत मार्ग बनाएको छ ताकि मनुष्य एक स्थानबाट अर्को स्थान एक नगरबाट अर्को नगर तथा एक देशबाट अर्को देश जानसकोस् । यसकारण यो मार्ग पनि मानिसको व्यवहारिक तथा सामाजिक आवश्यकता हो जसको व्यवस्था गरेर अल्लाहले मानवमाथि एउटा महान अनुग्रह गरेको छ ।

قَالَ نُوحٌ رَّبِّ إِنَّهُمْ عَصَوْنِي وَاتَّبَعُوا مَن لَّمْ يَزِدْهُ مَالُهُ وَوَلَدُهُ إِلَّا خَسَارًا ﴿٢١﴾

(२१) नूह (अलैहिस्सलाम) ले भने कि हे मेरा प्रभु ! उनीहरूले मेरो अवहेलना गरे[1] तथा यस्ताको आज्ञापालन गरे जसका माल तथा सन्तानले उनलाई (निःसन्देह) हानिमा नै बढायो ।[2]

وَمَكَرُوا مَكْرًا كُبَّارًا ﴿٢٢﴾

(२२) तथा उनीहरूले निकै ठूलो धोखा गरे ।[3]

وَقَالُوا لَا تَذَرُنَّ آلِهَتَكُمْ وَلَا تَذَرُنَّ وَدًّا وَلَا سُوَاعًا وَلَا يَغُوثَ وَيَعُوقَ وَنَسْرًا ﴿٢٣﴾

(२३) तथा उनीहरूले भने कि कदापि आफ्ना देवताहरूलाई नछोड्नु तथा न वद्द, सुवाअ्, यगूस, यऊक एवं नस्रलाई (छाड्नु) ।[4]

---

[1] अर्थात् मेरो अवहेलनामा अडिएका छन् तथा मेरा निमन्त्रणलाई स्वीकार गरिराखेका छैनन् ।

[2] अर्थात् उनका सानाले आफ्ना ठूला तथा धनवानहरूकै अनुगमन गरे जसका धन तथा सन्तानहरूले उनका लोक तथा परलोकको हानिलाई नै बढाएको छ ।

[3] यो धोखा तथा छल के थियो ? केहीले भने कि उनका केही मानिसहरूलाई नूह अलैहिस्सलामको हत्या गर्नुमा प्रेरित गरेका थिए । केही अन्य भन्दछन् कि धन तथा सन्तानका कारण जुन स्वार्थको धोखामा उनी ग्रस्त भए, यहाँसम्मकि उनीमध्ये केहीले भने कि यदि यिनी सत्यमा नभएको भए त यिनलाई यी सुख-सुविधाहरू किन प्राप्त हुन्थे ? केही ज्ञाताका विचारमा उनका प्रमुखहरूको यो भनाई थियो कि तिमी आफ्ना देवताहरूका उपासना नछोड्नु तथा केहीका विचारमा उनको कुफ्र (इन्कार) नै ठूलो धोका थियो ।

[4] यी नूह अलैहिस्सलामका समुदायका "पाँच सदाचारी व्यक्ति" थिए जसको उनीहरूले उपासना गर्दथे तथा उनको यति ख्याति भयो कि अरबमा पनि उनको पूजा-अर्चना हुँदैरह्यो । जस्तै 'वद्द' दूमतुल जनदल (स्थान) मा क़बीला कल्बका, 'सुवाअ' समुद्र तटका क़बीला हुज़ैलका, 'यगूस' सबाका निकट जुर्फ नामका स्थानमा मुराद तथा बनू गुतैफ़को । 'यऊक' हमदान क़बीलाको तथा 'नस्र' हिम्यर जातिको क़बीला जुल कलाअको उपास्य रह्यो । (इब्ने क़सीर, फ़तहुल क़दीर) यी पाँचवटै नूहको जातिका नेक (सदाचारी) मानिसहरूका नाम थिए । जब यिनीहरू मरे त शैतानले उनका श्रद्धालुहरूसित भन्यो कि उनका चित्र बनाएर आफ्ना घर तथा पसलहरूमा राख ताकि उनी याद रहून् तथा उनको ध्यान गरेर तिमी पनि सत्कर्म गरिरह । जब यी चित्र बनाएर राख्नेहरू मरेर गए त उनका वंशलाई यो भनेर शिर्कमा लिप्त गरिदियो कि तिम्रा पूर्वजले त यिनीहरूको उपासना गर्दथे, जसका चित्र तिम्रा घरहरूमा झुण्डिराखेका छन् । अतः उनीहरूले तिनका पूजा आरम्भ गरिदिए । (सहीह बुख़ारी, तफ़सीर सूरः नूह)

وَقَدْ اَضَلُّوْا كَثِيْرًا ۚ وَلَا تَزِدِ الظّٰلِمِيْنَ اِلَّا ضَلٰلًا ﴿٢٤﴾

(२४) तथा उनीहरूले धेरै मानिसहरूलाई भ्रमित गरे,[1] (हे प्रभु !) तिमी ती अत्याचारीहरूका विचलनलाई अझै बढाइदेउ ।

مِمَّا خَطِيْٓـٰٔتِهِمْ اُغْرِقُوْا فَاُدْخِلُوْا نَارًا ۙ فَلَمْ يَجِدُوْا لَهُمْ مِّنْ دُوْنِ اللّٰهِ اَنْصَارًا ﴿٢٥﴾

(२५) यिनीहरू आफ्ना पापका कारण[2] (पानीमा) डुबाइए तथा नरकमा पुऱ्याइए र अल्लाहका अतिरिक्त उनीहरूले आफ्नो कोही सहायता गर्नेवाला पाएनन् ।

وَقَالَ نُوْحٌ رَّبِّ لَا تَذَرْ عَلَى الْاَرْضِ مِنَ الْكٰفِرِيْنَ دَيَّارًا ﴿٢٦﴾

(२६) तथा नूह (अलैहिस्सलाम) ले भने कि हे मेरा प्रभु ! तिमी धर्तीमा कुनै काफ़िरलाई रहन-सहन गर्नेवालालाई नछोड ।[3]

اِنَّكَ اِنْ تَذَرْهُمْ يُضِلُّوْا عِبَادَكَ وَلَا يَلِدُوْٓا اِلَّا فَاجِرًا كَفَّارًا ﴿٢٧﴾

(२७) यदि तिमीले उनीहरूलाई छोड्दिनेछौ भने निःसन्देह यिनी तिम्रा अन्य भक्तहरूलाई पनि विचलित गरिदिनेछ तथा यी कुकर्मले काफ़िरहरूलाई नै जन्म दिनेछन् ।

رَبِّ اغْفِرْ لِيْ وَلِوَالِدَيَّ وَلِمَنْ دَخَلَ بَيْتِيَ مُؤْمِنًا وَّلِلْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ ؕ وَلَا تَزِدِ

(२८) हे मेरा प्रभु ! तिमीले मलाई तथा मेरा माता-पिता तथा जो पनि ईमान स्वीकार गरेर मेरो घरमा आए तथा समस्त ईमान भएका पुरुषहरू तथा समस्त ईमान भएका महिलाहरूलाई क्षमा गरी

---

[1] أَضَلُّوا क्रियाको कर्ता नूहको जातिका प्रमुख हुन् । अर्थात् उनीहरूले धेरै मानिसहरूलाई पथभ्रष्ट गरे अथवा त्यसको कर्ता यही उपरोक्त पाँच बुत (देवता) हुन् । यसको अभिप्राय यो हो कि धेरै मानिस यिनका कारण विचलनमा लीन भए । जस्तो ईशदूत इब्राहीम अलैहिस्सलामले पनि भनेका थिए ।

﴿رَبِّ إِنَّهُنَّ أَضْلَلْنَ كَثِيرًا مِّنَ النَّاسِ﴾

"हे मेरा प्रभु, उनीहरूले धेरै मानिसहरूलाई पथभ्रष्ट गरिदिएका छन् ।" (इब्राहीम-३६)

[2] مِمَّا मा ما अधिक छ । مِنْ خَطِيئَاتِهِمْ को अर्थ مِنْ أجلها و بِسَبَبِهَا أغرقوا بالطوفان "अट्टेरीपना र पापका कारण तूफानमा डुबाइए" हो । (फ़तहुल क़दीर)

[3] यो श्राप त्यस समय दिए जब ईशदूत नूह अलैहिस्सलाम उनका ईमान ल्याउनबाट निकै निराश भए तथा अल्लाहले पनि सूचित गरिदियो कि अब उनीहरूमध्ये कसैले ईमान स्वीकार गर्ने छैन ।

الظّٰلِمِينَ اِلَّا تَبَارًا ﴿٢٨﴾

देउ[1] तथा काफ़िरहरूलाई विनाशका अतिरिक्त अन्य कुनै कुरामा नबढाउ ।[2]

سُوْرَةُ الْجِنِّ

## सूरतुल जिन्न-७२

सूरः जिन्न मक्कामा अवतरित भएको तथा यसमा २८ आयतहरू एवं २ रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

قُلْ اُوْحِيَ اِلَيَّ اَنَّهُ اسْتَمَعَ نَفَرٌ مِّنَ الْجِنِّ فَقَالُوْٓا اِنَّا سَمِعْنَا قُرْاٰنًا عَجَبًا ﴿١﴾

(१) (हे मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम) तपाईं भनिदिनुस् कि मलाई प्रकाशना गरिएको छ जिन्नहरूका एउटा गिरोहले (कुर्‌आन) सुन्यो ।[3] तथा भन्यो कि हामीले विचित्र कुर्‌आन सुनेका छौं ।[4]

يَّهْدِيْٓ اِلَى الرُّشْدِ فَاٰمَنَّا بِهٖ

(२) जो सत्यमार्गतिर मार्गदर्शन गर्छ[5] हामी त त्यसमाथि ईमान स्वीकार गरिसक्यौं,[6] (अब)

---

[1]काफ़िरहरूलाई श्राप दिए त भने आफ्ना तथा मोमिनहरूका लागि क्षमाको प्रार्थना गरे ।

[2]यो श्राप केयामतसम्म आउने अत्याचारीहरूका लागि छ, जस्तो उपरोक्त प्रार्थना सबै ईमानवाला पुरुष तथा स्त्रीहरूका लागि छ ।

[3]यो घटना सूरः अहक़ाफ़ २९ मा गुज्रिसकेको छ कि नबी सल्लल्लाहु अलैहि व सल्लम वादिये नख़्लमा सहाबा किरामलाई फ़ज्रको नमाज़ पढाइराख्नु भएको थियो कि केही जिन्नहरू त्यहाँबाट गुज्रे त उनीहरूले तपाईंको कुर्‌आन सुने, जसबाट उनी प्रभावित भए । यहाँ भनिंदैछ कि त्यस समय जिन्नहरूबाट कुर्‌आन सुन्नुको ज्ञान उहाँलाई भएन, अपितु प्रकाशनाद्वारा उहाँलाई यसबाट सूचित गरियो ।

[4] عَجَبًا धातुको अतिशयका रुपमा अथवा सम्बन्ध लुप्त छ ذَا عَجَبٍ अथवा धातुकर्ता संज्ञा مُعْجِبٌ का अर्थमा छ । अर्थात् हामीले यस्तो कुर्‌आन सुनेका छौं जो प्रभाव तथा वाक्य-शैलीमा विचित्र छ, अथवा शिक्षाका आधारमा विचित्र छ, अथवा बरकत (शुभ) मा आश्चर्यजनक छ । (फ़तहुल क़दीर)

[5]यो कुर्‌आनको अर्को विशेषता हो कि त्यो सत्यमार्ग अर्थात् सत्य एवं औचित्यलाई स्पष्ट गर्दछ अथवा अल्लाहको ज्ञान प्रदान गर्दछ ।

[6]अर्थात् हामीले त त्यसलाई सुनेर यस कुराको पुष्टि गरिदियौं कि वास्तवमा यो ईशवाणी हो, कुनै मनुष्यको कुरा होइन । यसमा काफ़िरहरुलाई झपार छ कि

وَلَنْ نُّشْرِكَ بِرَبِّنَآ اَحَدًا ۙ

हामीले कदापि आफ्ना प्रभुको कुनै अन्यलाई साझेदार बनाउने छैनौं ।[1]

وَّاَنَّهٗ تَعٰلٰى جَدُّ رَبِّنَا مَا اتَّخَذَ صَاحِبَةً وَّلَا وَلَدًا ۙ

(३) तथा निःसन्देह हाम्रा प्रभुको महिमा महान छ, न उसले कसैलाई (आफ्नो) पत्नी बनाएको छ तथा न सन्तान ।[2]

وَّاَنَّهٗ كَانَ يَقُوْلُ سَفِيْهُنَا عَلَى اللّٰهِ شَطَطًا ۙ

(४) तथा निःसन्देह हामी मध्येको मूर्खले अल्लाहका विषयमा झुठा कुरा गर्दथ्यो ।[3]

وَّاَنَّا ظَنَنَّآ اَنْ لَّنْ تَقُوْلَ الْاِنْسُ وَالْجِنُّ عَلَى اللّٰهِ كَذِبًا ۙ

(५) तथा हामीले त यही ठानिराख्यौं कि असम्भव छ कि मनुष्य तथा जिन्नातले अल्लाहमाथि झुठा कुरा लगाऊन् ।[4]

कि जिन्नले त एकपटक सुनेर नै यस कुरआनमाथि विश्वास (ईमान) गरिहाले । अलिकति आयत सुनेर नै उनको कायापलट भयो तथा उनले बुझे कि यो कुनै मनुष्यले बनाएको कुरा होइन । किन्तु मनुष्यलाई विशेषरूपले यिनका प्रमुखहरूलाई नै यसबाट नै कुनै लाभ भएन, जबकि उनीहरूले रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्मका मुखबाट कैयन् पटक कुरआन सुने । यसका अतिरिक्त उहाँ सल्लल्लाहु अलैहि वसल्लम स्वयं उनीहरूमध्ये हुनुहुन्थ्यो तथा उनैको भाषामा उनलाई कुरआन सुनाउनु हुन्थ्यो ।

[1]न त्यसको सृष्टि मध्येबाट, न कुनै अन्य उपास्यलाई, यसकारण कि उनी आफ्ना प्रभुत्वमा एक्लो (अद्वितीय) छ ।

[2] جَدٌّ को अर्थ महानता एवं प्रताप हो, अर्थात् हाम्रा प्रभुको श्रेष्ठता यसभन्दा उच्चतम छ कि त्यसका सन्तान अथवा पत्नी होस् । मानौं जिन्नहरूले यी मुश्रिक (मूर्तिपूजकहरू) को त्रुटि खोलिदिए जसले अल्लाहसित पत्नी र सन्तानलाई सम्बोधित गर्दथे । उनीहरूले दुबै कमजोरीहरूबाट प्रभुको पवित्रता एवं स्वच्छताको वर्णन गरे ।

[3] سَفِيْهُنَا (हाम्रा मूर्ख) सित अभिप्राय केहीले शैतान लिएका छन्, केहीले उनका साथी जिन्न तथा केहीले सामान्य रुपमा प्रत्येक त्यो व्यक्ति लिएका छन् जो यो गलत भ्रम राख्दछ कि अल्लाहको सन्तान छ । شَطَطًا को कैयन् अर्थ लिएका छन्, अत्याचार, झूठ, अनृत, कुफ्रमा अतिशय आदि । उद्देश्य सन्तुलित मार्गबाट दूरी तथा सीमा पार गर्नु हो । अभिप्राय यो हो कि यो कुरो कि अल्लाहको सन्तान छ ती मूर्खहरूको कुरा हो जो सन्तुलित तथा सीधा मार्गबाट टाढा सीमाभन्दा पर, मिथ्यावादी तथा मिथ्यारोपी छन् ।

[4]यसकारण हामीले त्यसको पुष्टि गरिरह्यौं तथा अल्लाहका विषयमा यो आस्था राखिरह्यौ यहाँसम्म कि हामीले कुरआन सुन्यौं त हामीमाथि आस्थाको

(६) वास्तविकता यो हो कि केही मनुष्यहरूले केही जिन्नहरूसित शरण माँग्दथे,[१] जसबाट जिन्नात आफ्नो उद्दण्डतामा झन् बढेर गए ।[२]

وَّاَنَّهٗ كَانَ رِجَالٌ مِّنَ الْاِنْسِ يَعُوْذُوْنَ بِرِجَالٍ مِّنَ الْجِنِّ فَزَادُوْهُمْ رَهَقًا ۝

(७) (तथा मनुष्यहरूले) पनि जिन्नहरूको जस्तै यो ठानेका थिए कि अल्लाहले कदापि कसैलाई पठाउने छैन । (अथवा कसैलाई पुन: जीवित गर्नेछैन)[३]

وَّاَنَّهُمْ ظَنُّوْا كَمَا ظَنَنْتُمْ اَنْ لَّنْ يَّبْعَثَ اللّٰهُ اَحَدًا ۝

(८) तथा हामीले आकाशलाई नियालेर हेर्यौं त त्यसलाई अत्यन्त तल्लीन सुरक्षाकर्मी एवं तीब्र ज्वालाहरूबाट पूर्ण पायौं ।[४]

وَّاَنَّا لَمَسْنَا السَّمَآءَ فَوَجَدْنٰهَا مُلِئَتْ حَرَسًا شَدِيْدًا وَّشُهُبًا ۝

(९) तथा यसभन्दा पूर्व हामी कुरा सुन्नका लागि आकाशमा ठाउँ-ठाउँमा बस्ने गर्दथ्यौं ।[५] अब जसले पनि कान थाप्छ, त्यसले एउटा ज्वालालाई आफ्नो ताक (घात) मा पाउँछ ।[६]

وَّاَنَّا كُنَّا نَقْعُدُ مِنْهَا مَقَاعِدَ لِلسَّمْعِ ۭ فَمَنْ يَّسْتَمِعِ الْاٰنَ يَجِدْ لَهٗ شِهَابًا رَّصَدًا ۝

मिथ्या हुनु खुलिहाल्यो ।

[१]अज्ञानकालमा एउटा प्रथा यो पनि थियो कि उनीहरू कही यात्रामा जान्थे भने जुन वादीमा रोकिन्थे त्यहाँ जिन्नहरूबाट शरण माग्दथे, जस्तै क्षेत्रका प्रमुख तथा ठुलावाट शरण माँगिन्छ । इस्लामले यसलाई समाप्त गर्‍यो तथा मात्र एउटा अल्लाहसित शरण माँग्नुमाथि बल दियो ।

[२]अर्थात् जब जिन्नहरूले देखे कि मानिस हामीसित तर्सन्छन् तथा हाम्रा शरण माँग्दछन् त उनका अभिमान तथा उद्दण्डतामा झन् अधिक भयो । رَهَقًا यहाँ अहंकार, उपद्रव अवज्ञाकारिताका अर्थमा छ । त्यसको मूल अर्थ हो पाप तथा निषेधलाई ढाक्नु तथा उनलाई गर्नु ।

[३] بَعَثَ का दुबै अर्थ हुनसक्छन्, जस्तो कि अनुवादबाट स्पष्ट छ ।

[४] حارس ، حرس (चौकीदार, रक्षक) को तथा شهاب، شهب (ज्वाला) को बहुवचन हो अर्थात् आकाशहरूमा फरिश्ता चौकीदारी गर्दछन् कि आकाशहरूको कुनै कुरा कुनै अन्यले नसुनोस् तथा यी तारा आकाशमा जाने शैतानहरूमाथि ज्वाला बनेर खस्छन् ।

[५]तथा आकाशवाणीको केही सुन-गुन पाएर काहिन ज्योतिषीहरुलाई भन्ने गर्दथे जसमा उनी आफ्नो तर्फबाट सय झूठ मिलाएर दिने गर्दथे ।

[६]किन्तु मुहम्मद सल्लल्लाहु अलैहि व सल्लमलाई पठाउनुका पश्चात यो क्रम समाप्त गरिदियो ।

(१०) र हामी जान्दैनौं कि धर्तीवालाहरुसँग कुनै अनिष्ठको विचार गरिएको छ अथवा उनको प्रभुको विचार उनीसँग भलाईको छ ।[1]

وَأَنَّا لَا نَدْرِيٓ أَشَرٌّ أُرِيدَ بِمَن فِي ٱلْأَرْضِ أَمْ أَرَادَ بِهِمْ رَبُّهُمْ رَشَدًا ⑩

(११) तथा यो कि (नि:सन्देह) केही त हामीमध्ये सदाचारी छन् तथा केही त्यसका विपरीत पनि छन् । हामी विभिन्न प्रकारले विभाजित छौं ।

وَأَنَّا مِنَّا ٱلصَّٰلِحُونَ وَمِنَّا دُونَ ذَٰلِكَ كُنَّا طَرَآئِقَ قِدَدًا ⑪

(१२) तथा हामीलाई पूर्ण विश्वास भयो[3] कि हामीले अल्लाह तआलालाई धर्तीमा कदापि विवश गर्न सक्दैनौं तथा न हामी भागेर त्यसलाई पराजित गर्नसक्छौं ।

وَأَنَّا ظَنَنَّآ أَن لَّن نُّعْجِزَ ٱللَّهَ فِي ٱلْأَرْضِ وَلَن نُّعْجِزَهُۥ هَرَبًا ⑫

(१३) तथा हामीले मार्गदर्शनको कुरा सुन्नासाथ त्यसमाथि ईमान स्वीकार गरिसक्यौं, तथा जसले पनि आफ्ना प्रभुमाथि ईमान स्वीकार गर्नेछ, त्यसलाई न कुनै हानिको भय छ न अत्याचार (तथा दुख) को[4]

وَأَنَّا لَمَّا سَمِعْنَا ٱلْهُدَىٰٓ ءَامَنَّا بِهِۦ فَمَن يُؤْمِنۢ بِرَبِّهِۦ فَلَا يَخَافُ بَخْسًا وَلَا رَهَقًا ⑬

---

अब जो पनि यस विचारभन्दा माथि जान्छ अग्निको ज्वाला त्यसको घातमा रहन्छ तथा टुटेर त्यसमाथि खस्छ ।

[1]अर्थात् यस आकाशको सुरक्षाबाट उद्देश्य धर्तीवासीहरूलाई कुनै नराम्रो योजनाको पूर्ति हो अर्थात् उनीमाथि प्रकोप उतार्नु हो, अथवा भलाईको विचार अर्थात रसूल (सन्देष्टा) पठाउनु हो ।

[2] قِدَدٌ (वस्तुको खण्ड) صَارَ القومُ قِدَدًا त्यस समय बोल्दछन् जब उनका अवस्थाहरू परस्पर भिन्न हुन्छन्, अर्थात् हामी विभिन्न समूह तथा विभिन्न विचारहरूमा विभाजित छौं । अर्थात् जिन्नहरूमा पनि मुसलमान, काफ़िर, यहूदी, ईसाई, मजूसी आदि छन् । केही भन्दछन् कि उनीहरुमा पनि मुसलमानहरुको जस्तो कदरीया, मुरजआ, राफ़िज़ा आदि छन् । (फ़तहुल क़दीर)

[3]यहाँ ظَنّ विश्वासका अर्थमा छ, जस्तो कि अरु पनि केही स्थानहरूमा छ ।

[4]अर्थात् न यस कुरोको सन्देह छ कि उनका पुण्य तथा उपकारहरूमा कुनै कमी गरिनेछ र न यस कुराको भय कि उनका कुकर्महरूका केही बढाइनेछ ।

وَأَنَّا مِنَّا الْمُسْلِمُونَ وَمِنَّا الْقَاسِطُونَ ۖ فَمَنْ أَسْلَمَ فَأُولَٰئِكَ تَحَرَّوْا رَشَدًا ⑭

(१४) तथा, हामीमध्ये केही मुसलमान छन् तथा केही अन्यायी छन् ।[1] त जो मुसलमान भए उनीहरूले सोझो मार्गको खोज गरिहाले ।

وَأَمَّا الْقَاسِطُونَ فَكَانُوا لِجَهَنَّمَ حَطَبًا ⑮

(१५) तथा जो अत्याचारी छन् उनीहरू नरकको इंधन बने ।[2]

وَأَن لَّوِ اسْتَقَامُوا عَلَى الطَّرِيقَةِ لَأَسْقَيْنَاهُم مَّاءً غَدَقًا ⑯

(१६) तथा यदि यो कि यिनीहरू सोझा मार्गमा दृढ रहन्थे भने त अवश्य हामीले उनीहरूलाई अधिक जल पिलाउँथ्यौं ।

لِّنَفْتِنَهُمْ فِيهِ ۚ وَمَن يُعْرِضْ

(१७) ताकि हामीले त्यसमा उनको परीक्षा लिइहालौं ।[3]

[1]अर्थात् जो मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) को नबूवत (दूतत्व) प्रति ईमान स्वीकार गरे उनी मुसलमान तथा जसले इन्कार गरे उनी अन्यायी छन् । قَاسِطٌ अत्याचारी, अन्यायी, مُقْسِطٌ न्यायकारी, अर्थात् सुलासी मुजर्रद (तीन अक्षरका शब्दसित जसमा अधिक अक्षर नहोऊन्) बाट होऊन् त अत्याचार गर्नुका अर्थमा तथा मज़ीद फीह (जसमा अधिक अक्षर होऊन्) बाट होऊन् भने न्याय गर्नुका ।

[2]यसबाट ज्ञान भयो कि मानिसहरू जस्तै जिन्न पनि स्वर्ग तथा नर्कमा जानेछन् । उनीहरूमध्ये काफ़िर नरकमा तथा मुसलमान स्वर्गमा । यहाँसम्म जिन्नहरूको कुरा पुरा भयो । अब अगाडि पुन: अल्लाहको कथन छ ।

[3] أن لَوِ اسْتَقَامُوا को संयोजन |اسْتَمَعَ نَفَرٌ مِّنَ الْجِنِّ| सित छ, अर्थात् यो कुरो पनि मलाई प्रकाशनाद्वारा भनिएको छ कि ..... الطريقة सित तात्पर्य इस्लाम छ । غَدَقٌ को अर्थ अधिक हो । अधिक जलसित अभिप्राय सांसारिक सम्पन्नता हो, अर्थात् संसारलाई दिएर हामीले उनको परीक्षा लिन्थ्यौं, जस्तो अन्य स्थानमा भनेको छ : ﴿وَلَوْ أَنَّ أَهْلَ الْقُرَىٰ آمَنُوا وَاتَّقَوْا لَفَتَحْنَا عَلَيْهِم بَرَكَاتٍ مِّنَ السَّمَاءِ وَالْأَرْضِ﴾
(अल-आराफ-९६)

यही कुरो अहले किताब (यहूद तथा नसारा) का सन्दर्भमा पनि भनिएको छ । (सूर: मायेद:-६६) केही ज्ञाताहरू भन्दछन् कि यस आयतको अवतरण त्यस समय भएको थियो जब कुरैशका काफ़िरहरूमाथि अकाल आच्छादित गरियो । الطريقة को अर्को अर्थ विचलनको मार्ग गरिएको छ । यस अर्थका अनुसार यो भौतिक वैभव मोहलत दिनु स्वरुप हुनेछ । जस्तो अन्य स्थानमा अल्लाहले भन्यो:

﴿أَيَحْسَبُونَ أَنَّمَا نُمِدُّهُم بِهِ مِن مَّالٍ وَبَنِينَ ۞ نُسَارِعُ لَهُمْ فِي الْخَيْرَاتِ ۚ بَل لَّا يَشْعُرُونَ﴾

"के यिनीहरू (यस्तो कि) बुझेका छन् कि हामीले जे पनि उनका धन एवं सन्तान बढाइराखेका छौं त्यो उनका लागि भलाईहरुमा शीघ्रता

عَنْ ذِكْرِ رَبِّهِ يَسْلُكْهُ عَذَابًا صَعَدًا ﴿١٧﴾

तथा जुन व्यक्तिले आफ्ना प्रभुका स्मरणबाट मुख फर्काउनेछ त अल्लाह (तआला) ले त्यसलाई कठोर यातनामा पारिदिनेछ ।[1]

وَأَنَّ الْمَسَاجِدَ لِلَّهِ فَلَا تَدْعُوا مَعَ اللَّهِ أَحَدًا ﴿١٨﴾

(१८) तथा यो कि मस्जिदहरू केवल अल्लाहकै लागि (विशेष) छन्, त अल्लाह (तआला) का साथ कुनै अन्यलाई नपुकार ।[2]

وَأَنَّهُ لَمَّا قَامَ عَبْدُ اللَّهِ يَدْعُوهُ كَادُوا يَكُونُونَ عَلَيْهِ لِبَدًا ﴿١٩﴾

(१९) तथा जब अल्लाहको भक्त त्यसको इबादतका लागि उभ्यो त निकट थियो कि समूह-समूह बनेर त्यसमाथि घेरा हालून् ।[3]

गरिराखेका छौं । (होइन-होइन) बरु यिनीहरू बुझ्दैनन् ।" (अल-मोमिनून-५५, ५६)

इमाम इब्ने कसीरका विचारमा यो दोस्रो भावार्थ उचित छ जबकि इमाम शौकानीका विचारमा प्रथम भावार्थ अधिक सही छ ।

[1] صَعَدًا अर्थात् عذابًا شاقًا شديدًا موجعًا مؤلمًا (इब्ने कसीर) "अति घोर दु:खदायी तथा दिर्घकालीन यातना ।"

[2] مسجد को अर्थ सज्दाको ठाउँ हो । सज्दा (ढोक) पनि नमाज़को एउटा रुक्न (स्तम्भ, अनिवार्य कर्म) हो यसैकारण नमाज़ पढ्नेहरूको लक्ष्य मात्र एक अल्लाहको इबादत हो । यसकारण मस्जिदहरूमा कुनै अन्यको उपासना, कुनै अन्यसित प्रार्थना, विनय तथा अरु कोहीसित गुहार अथवा त्यसलाई सहायताका लागि पुकार्न वैध छैन । यदि यहाँ पनि अल्लाह बाहेक कसैलाई पुकार्न थालियो भने यो अति नराम्रो तथा अत्याधिक अत्याचार हुनेछ । किन्तु दुर्भाग्यले नामका मुसलमान अब मस्जिदहरूमा पनि अल्लाहका साथ अरुहरूलाई सहायतार्थ पुकार्दछन्, जसमा अपितु मस्जिदमा यस्ता शिला-लेख झुण्ड्याएका हुन्छन् जसमा अल्लाहलाई छाडेर अरुलाई सहायतार्थ पुकारिएको छ । हाय ! فَلْيَبْكِ على الإسلام مَنْ كان بَاكِيًا "अल्लाहले आफ्नो अपार कृपाले विशेषगरी यसप्रकार का पथभ्रष्ट व्यक्तिहरुको मार्गदर्शन गरून् ।"

[3] عَبْدُ الله (अल्लाहका दास) सित अभिप्राय रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम हुन्, तथा अभिप्राय यो हो कि जिन्न तथा इन्सान मिलेर चाहन्छन् कि अल्लाहका यस प्रकाशलाई आफ्ना फूँकहरूले निभाइदेऊन् । यसका अन्य भावार्थ पनि वर्णन गरिएका छन् किन्तु इमाम इब्ने कसीरले यसलाई प्रधानता दिनुभएको छ ।

قُلْ اِنَّمَآ اَدْعُوْا رَبِّيْ وَلَآ اُشْرِكُ بِهٖٓ اَحَدًا ۝٢٠

(२०) (तपाईं) भनिदिनुस् कि म त केवल आफ्ना प्रभुलाई नै पुकार्दछु तथा त्यसका साथ कसैलाई साझीदार बनाउन्न ।[1]

قُلْ اِنِّيْ لَآ اَمْلِكُ لَكُمْ ضَرًّا وَّلَا رَشَدًا ۝٢١

(२१) भनिदिनुस् कि मलाई तिम्रा लागि कुनै लाभ हानिको अधिकार छैन ।[2]

قُلْ اِنِّيْ لَنْ يُّجِيْرَنِيْ مِنَ اللّٰهِ اَحَدٌ ۙ وَّلَنْ اَجِدَ مِنْ دُوْنِهٖ مُلْتَحَدًا ۝٢٢

(२२) भनिदिनुस् कि मलाई कदापि कसैले अल्लाहबाट बचाउन सक्दैन ।[3] तथा म कदापि त्यसका अतिरिक्त शरणको स्थान पनि पाउन सक्दिन ।

اِلَّا بَلٰغًا مِّنَ اللّٰهِ وَرِسٰلٰتِهٖ ۭ وَمَنْ يَّعْصِ اللّٰهَ وَرَسُوْلَهٗ فَاِنَّ لَهٗ نَارَ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۝٢٣

(२३) परन्तु (मेरो काम) त केवल अल्लाहको कुरा तथा त्यसको सन्देश (मानिसहरूलाई) पुऱ्याइदिनु हो,[4] (अब) जसले पनि अल्लाह तथा त्यसका सन्देष्टाको अवहेलना गर्नेछ, त्यसका लागि नरक्को आगो छ जसमा यस्ता मानिस सधैं रहनेछन् ।

حَتّٰٓى اِذَا رَاَوْا مَا يُوْعَدُوْنَ فَسَيَعْلَمُوْنَ

(२४) यहाँसम्म कि जब त्यसलाई देख्नेछन् जसको उनलाई वचन[5] दिइन्छ, त निकट भविष्यमा

---

[1]अर्थात् जब सबै तपाईंको शत्रुतामा एकमत भइहाले तथा दृढ भएका छन् त तपाईंले भनिदिनुस् कि म त मात्र आफ्ना प्रभुको उपासना गर्दछु, त्यसैबाट शरण माँग्दछु तथा त्यसैमाथि भरोसा गर्दछु ।

[2]अर्थात् मलाई तिम्रो मार्गदर्शन अथवा विचलन एवं लाभ-हानिको अधिकार छैन, म त मात्र एकको भक्त हूँ, जसलाई अल्लाहले प्रकाशना तथा रिसालतका लागि निर्वाचित गरेको छ।

[3]यदि म त्यसको अवज्ञा गरुँ तथा त्यसले मलाई यातना दिन चाहोस् ।

[4]यो لَا أَمْلِكُ لَكُمْ बाट अनुबन्धित (अलग) छ। यो पनि सम्भव छ कि لَنْ يُجِيرَنِيْ सित अनुवन्ध होस् अर्थात् अल्लाहको यातनाबाट कुनै कुराले बचाउन सक्छ भने त्यो यही हो कि म धर्मप्रचारका कर्तव्यलाई पूरा गरुँ, जसलाई पूरा गर्न अल्लाहले ममाथि अनिवार्य गरेको छ। رسالاته को संयोजन अल्लाहमाथि छ अथवा بَلَاغًا माथि, अथवा वाक्य यसप्रकार छ । إلا أبلغ عن الله و أعمل برسالته (फ़तहुल क़दीर)

[5]अथवा अभिप्राय यो हो कि यिनी नबी सल्लल्लाहु अलैहि व सल्लम तथा मुसलमानहरूको शत्रुता तथा आफ्ना कुफ्रमाथि डटिरहनेछन्, यहाँसम्मकि उनी लोक-परलोकमा त्यो यातना देखून्, जसको उनलाई वचन दिइन्छ ।

مَنْ أَضْعَفُ نَاصِرًا وَأَقَلُّ عَدَدًا ﴿٢٤﴾

जान्नेछन् कि कसको सहायक क्षीण तथा कसको गिरोह कम छ ।[1]

قُلْ إِنْ أَدْرِي أَقَرِيبٌ مَّا تُوعَدُونَ أَمْ يَجْعَلُ لَهُ رَبِّي أَمَدًا ﴿٢٥﴾

(२५) (तपाई) भनिदिनुस् कि मलाई ज्ञान छैन कि जसको वादा तिमीसित गरिन्छ, त्यो निकट छ अथवा मेरो प्रभुले त्यसका लागि टाढाको अवधि निर्धारित गर्नेछ ।[2]

عَالِمُ الْغَيْبِ فَلَا يُظْهِرُ عَلَىٰ غَيْبِهِ أَحَدًا ﴿٢٦﴾

(२६) त्यो परोक्षको कुरा जान्दछ तथा आफ्ना परोक्षबारे त्यसले कसैलाई अवगत गराउँदैन ।

إِلَّا مَنِ ارْتَضَىٰ مِن رَّسُولٍ فَإِنَّهُ يَسْلُكُ مِن بَيْنِ يَدَيْهِ وَمِنْ خَلْفِهِ رَصَدًا ﴿٢٧﴾

(२७) त्यस सन्देष्टाका अतिरिक्त जसलाई त्यसले प्रिय बनाइहालोस्,[3] यसकारण कि त्यसका पनि अगाडि-पछाडि रक्षक निर्धारित गरिदिन्छ ।[4]

لِّيَعْلَمَ أَن قَدْ أَبْلَغُوا رِسَالَاتِ

(२८) ताकि ज्ञान हुन जाओस् कि उनले आफ्ना प्रभुका

---

[1]अर्थात् त्यस समय उनलाई थाहा हुनेछ कि मुसलमानहरूको सहायक दुर्बल छ अथवा मुश्रिकहरू (बहुदेववादीहरू) को तथा एकेश्वरवादीहरूको संख्या कम छ अथवा अल्लाहका अतिरिक्तका पूजारीहरूको ? अभिप्राय यो हो कि मुश्रिकहरूको त कुनै सहायक नै हुनेछैन तथा अल्लाहको असंख्य सेनाहरूका अगाडि यी मुश्रिकहरूको सेना पनि नगन्य नै हुनेछ ।

[2]अभिप्राय यो हो कि प्रकोप अथवा प्रलयको ज्ञान, यो परोक्ष (अदृश्य) सित सम्बन्ध राख्दछ जसलाई अल्लाह नै जान्दछ कि त्यो दूर छ वा निकट ।

[3]अर्थात् आफ्ना पैग़म्बर (सन्देष्टा) लाई केही परोक्षका कुराहरूसित सूचित गरिदिन्छ, जसको सम्बन्ध या त सन्देश पुऱ्याउनुसित हुन्छ अथवा उनका सन्देष्टा हुनुका प्रमाण हुन्छन् । तथा खुला कुरा हो कि अल्लाहद्वारा सूचित गर्नबाट सन्देष्टा परोक्षका जान्नेवाला हुनसक्दैन, किनकि यदि पैग़म्बरलाई पनि परोक्षको ज्ञान हुन्थ्यो भने अल्लाहको तर्फबाट त्यसलाई परोक्षसित सूचित गर्नुको कुनै अर्थ नै रहन्न । अल्लाह तआला आफ्नो परोक्ष त्यसै समय आफ्ना रसूलमाथि व्यक्त गर्दछ जब उसलाई पहिलेदेखि यस परोक्षको ज्ञान हुँदैन, अत: परोक्षज्ञ मात्र अल्लाहनै छ । जस्तो कि यहाँ पनि यसलाई स्पष्ट गरिएको छ ।

[4]अर्थात् प्रकाशना उतार्नुको समय पैग़म्बरका अगाडि-पछाडि फरिश्ताहरू हुन्छन् जो जिन्न तथा शैतानहरूलाई प्रकाशनाका कुरा सुन्न दिँदैनन् ।

رَبِّهِمْ وَأَحَاطَ بِمَا لَدَيْهِمْ وَأَحْصَىٰ كُلَّ شَيْءٍ عَدَدًا ﴿٢٨﴾

सन्देश पुऱ्याइदिए,[1] अल्लाह (तआला) ले उनका निकटवर्ती कुराहरूलाई घेरेको छ[2] तथा प्रत्येक वस्तुको संख्या गणना गरिराखेको छ ।[3]

سُورَةُ الْمُزَّمِّلِ

## सूरतूल मुज़्ज़म्मिल-७३

सूर: मुज़्ज़म्मिल मक्कामा अवतरित भएको तथा त्यसमा बीस आयतहरू एवं दुई रुकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

يَا أَيُّهَا الْمُزَّمِّلُ ﴿١﴾

(१) हे चादर (दोसल्ला) मा बेरिएको ![4]

---

[1] لِيَعْلَمَ (सर्वनाम) कसतिर फर्कन्छ ? केहीका विचारमा रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम हुन्, ताकि उहाँले जानिहालुन् कि उहाँभन्दा पहिला रसूलहरूले पनि अल्लाहको सन्देश यसैप्रकार पुऱ्याए जुनप्रकार उहाँले पुऱ्याउनुभयो, अथवा रक्षक फरिश्ताहरूले आफ्ना प्रभुको सन्देश पैग़म्बरलाई पुऱ्याइदिएका छन् । केही विद्हरूले त्यसलाई अल्लाहतिर फर्काएका छन्, यस स्थितिमा अभिप्राय यो हुनेछ कि अल्लाह आफ्ना फरिश्ताहरूद्वारा आफ्ना पैग़म्बरहरूको सुरक्षा गर्दछ ताकि त्यसले रिसालत (सन्देश पुऱ्याउनु) को कर्तव्यको पालन उचित ढङ्गले गर्नसकून् । त्यसले त्यस प्रकाशनाको पनि रक्षा गर्दछ जो पैग़म्बरहरूलाई गरिन्छ ताकि त्यसले जानोस् कि उनले आफ्ना प्रभुको सन्देश मानिसहरूसम्म प्रकाशना पुऱ्याइदिएका छन् । अथवा फरिश्ताहरूले पैग़म्बरहरूसम्म प्रकाशना पुऱ्याइदिएका छन् । अल्लाहलाई यद्यपि प्रत्येक वस्तुको ज्ञान पहिलादेखि नै छ । किन्तु यस्ता अवसरहरूमा अल्लाहद्वारा जान्नुको अभिप्राय त्यसका अस्तित्वमा आउनुको साधारण अवलोकन हो, जस्तै ﴾لِنَعْلَمَ مَن يَتَّبِعُ الرَّسُولَ﴿ "कि हामीले जानौं कि सन्देष्टाको सत्य अनुयायी को छ ?" (अल-बकर:-१४३) तथा ﴾وَلَيَعْلَمَنَّ اللَّهُ الَّذِينَ آمَنُوا وَلَيَعْلَمَنَّ الْمُنَافِقِينَ﴿ (अन्कबूत-११) आदि आयतहरूमा छ (इब्ने कसीर)

[2] फरिश्ताहरूका पासको अथवा पैग़म्बरहरूका पासको ।

[3] किनकि त्यसैले परोक्षको ज्ञान राख्दछ, जो भइसक्यो तथा जो भविष्यमा हुनेछ । सबैलाई उसले गनेको छ, अर्थात् त्यसका ज्ञानमा छ ।

[4] जुन समय यी आयतहरूको अवतरण भयो, नबी सल्लल्लाहु अलैहि व सल्लम चादर ओढेर पल्टेका थिए । अल्लाहले उहाँको यसै स्थितिको चर्चा गर्दै सम्बोधित गऱ्यो । अभिप्राय यो हो कि अब चादर छाडिदिनुस् तथा रातमा अलि उभिरहनुस् अर्थात् तहज्जुदको नमाज पढ्नुस् । भनिन्छ कि यस आदेशानुसार तहज्जुदको नमाज़ उहाँ सल्लल्लाहु अलैहि व सल्लममाथि अनिवार्य थियो । (इब्ने कसीर)

قُمِ الَّيۡلَ اِلَّا قَلِيۡلًا ۙ‏ ②

(२) रात्रिमा उठिहाल (तहज्जुदको नमाज़का लागि) परन्तु केहीबेर ।

نِّصۡفَهٗۤ اَوِ انْقُصۡ مِنۡهُ قَلِيۡلًا ۙ‏ ③

(३) आधि रात्रि अथवा त्यसभन्दा पनि केही कम ।

اَوۡ زِدۡ عَلَيۡهِ وَرَتِّلِ الۡقُرۡاٰنَ تَرۡتِيۡلًا ؕ‏ ④

(४) अथवा त्यसमा बढाइदिनुस्[1] तथा कुर्आनलाई रुकि-रुकि (स्पष्ट) पढ्ने गर।[2]

اِنَّا سَنُلۡقِىۡ عَلَيۡكَ قَوۡلًا ثَقِيۡلًا‏ ⑤

(५) निःसन्देह हामी तिमीमाथि बहुत भारी (ठूलो) कुरो शीघ्र नै अवतरित गर्नेछौं ।[3]

اِنَّ نَاشِئَةَ الَّيۡلِ هِىَ اَشَدُّ وَطۡـاً وَّاَقۡوَمُ قِيۡلًا ؕ‏ ⑥

(६) निःसन्देह रात्रिमा उठ्नु मनको एकाग्रताको लागि अति उचित छ ।[4] तथा कुरालाई अति उचित गर्नेवाला छ ।[5]

---

[1]यो قَلِيلًا बाट बदल्छ अर्थात् यो उभिनु (नमाज़का लागि) आधी रातभन्दा कम (तिहाई) अथवा केही अधिक (दुई तिहाई) छ भने कुनै आपत्ति छैन ।

[2]जस्तो कि हदीसहरूमा वर्णित छ कि उहाँ सल्लल्लाहु अलैहि व सल्लमद्वारा पढ्नु रुकि रुकि प्रष्ट हुन्थ्यो तथा आफ्ना अनुयायीहरूलाई पनि तरतीलका साथ पढ अर्थात् रुकि-रुकि (विस्तारै र प्रष्ट) पढ्नुको निर्देश दिनुभो ।

[3]रातको (क़याम) खडा रहनु मानवीय मनका लागि सामान्यतः कठिन छ । अतः यो मध्यवर्ती वाक्यको रुपमा भनियो कि हामीले यसभन्दा पनि भारी कुरा तिमीमाथि अवतरित गर्नेछौं, अर्थात् कुर्आन जसका आदेश तथा कर्तव्यहरूमा कार्यरत हुनु, यसको सीमाहरूका आबद्धता तथा त्यसको प्रचार-प्रसार एउटा भारी तथा प्राणघातक कार्य हो । केहीले बोझ (भारीपन) त्यो बोझ अभिप्राय लिएका छन् जो प्रकाशनाका समय रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लममाथि पर्दथ्यो, जसका कारण कडा जाडोमा पनि उहाँ पसिनाले भिज्दथे । (इब्ने क़सीर)

[4]यसको अर्को भावार्थ यो हो कि एकान्तमा कान कुर्आनका अर्थहरूलाई बुझ्नमा हृदयको अधिक साथ दिन्छन् जो एक नमाजी तहज्जुदमा पढ्दछ ।

[5]अर्को भावार्थ यो हो कि दिनको अपेक्षा राती कुर्आन पढ्नु अधिक स्पष्ट तथा मनका लगावका लागि अधिक प्रभावशाली छ यसकारण कि त्यस समय अरु आवाजहरू हुँदैनन्, वातावरण शान्त हुन्छ, त्यसैमा नमाजी जे पढ्दछ, त्यो आवाज तथा सांसारिक कोलाहलको भेट हुँदैन, बरु नमाजी त्यसबाट सुरक्षित रहन्छ तथा त्यसको प्रभावको संवेदन गर्दछ ।

إِنَّ لَكَ فِي النَّهَارِ سَبْحًا طَوِيلًا ﴿٧﴾

(७) निःसन्देह तिमीलाई दिनमा धेरै कार्य हुन्छन् ।[1]

وَاذْكُرِ اسْمَ رَبِّكَ وَتَبَتَّلْ إِلَيْهِ تَبْتِيلًا ﴿٨﴾

(८) तथा तिमी आफ्ना प्रभुका नामको जप गर्दैरह र तथा समस्त सृष्टिसित अलग भएर त्यसतिर ध्यानमग्न होऊ ।[2]

رَّبُّ الْمَشْرِقِ وَالْمَغْرِبِ لَا إِلَٰهَ إِلَّا هُوَ فَاتَّخِذْهُ وَكِيلًا ﴿٩﴾

(९) पूर्व तथा पश्चिमको प्रभु जसका अतिरिक्त कोही पुज्य छैन, तिमी उसैलाई आफ्नो संरक्षक बनाइहाल ।

وَاصْبِرْ عَلَىٰ مَا يَقُولُونَ وَاهْجُرْهُمْ هَجْرًا جَمِيلًا ﴿١٠﴾

(१०) तथा जे जति उनी भन्दछन् तिमी सहन गरिरह तथा उनीहरूलाई राम्रोसित छाडिराख ।

وَذَرْنِي وَالْمُكَذِّبِينَ أُولِي النَّعْمَةِ وَمَهِّلْهُمْ قَلِيلًا ﴿١١﴾

(११) तथा मलाई एवं ती झुठ्लाउने समृद्धि प्राप्तहरूलाई छाडिदेउ तथा उनीलाई अलि अवसर देउ ।

إِنَّ لَدَيْنَا أَنكَالًا وَجَحِيمًا ﴿١٢﴾

(१२) निःसन्देह हामीकहाँ कठोर बेडीहरू (नेलहरू) छन् तथा सल्किराखेको नरक छ ।

وَطَعَامًا ذَا غُصَّةٍ وَعَذَابًا أَلِيمًا ﴿١٣﴾

(१३) तथा घाटीमा उड्किने भोजन छ तथा दुःख दिनेवाली[3] यातना छ ।

---

[1] سَبْحٌ को अर्थ हो الْجَرْيُ وَ الدَّوران (हिंड्नु तथा घुमफिर गर्नु) अर्थात् दिनका समय सांसारिक कार्य हुन्छ । यो पहिले कुराको समर्थन हो । अर्थात् राति नमाज़ र तिलावत (कुर्आन पढ्नु) अधिक लाभप्रद तथा प्रभावी छ । अर्थात् यसमा नियमितताका साथ दिन होस् अथवा राति अल्लाहको पवित्रता, प्रशंसा, महिमा तथा 'लाइलाह इल्लाल्लाह' पढ्दै रह ।

[2] تَبَتُّل को अर्थ कट्नु तथा अलग हुनु हो, अर्थात् अल्लाहको उपासना तथा त्यससित प्रार्थना एवं विनयका लागि एक्लो तथा पूर्णरुपले त्यसतिर ध्यानमग्न भइहाल, यो रहबानीयत (साधुत्व) भन्दा अलग कुरो हो । रहबानीयत त सांसारिक सम्बन्धहरूका त्याग तथा बैरागको नाम हो । تَبَتُّل नाम हो सांसारिक कार्यहरूलाई पुरा गर्नुका पश्चात उपासनामा लाग्नु तथा अल्लाहसित प्रार्थना गर्नु, जो इस्लाममा प्रशंसनीय छ ।

[3] انكال यो نِكْل को बहुवचन हो । قيود (बेडीहरू) तथा केहीले أغلال का अर्थमा लिएका छन् अर्थात् तौक (रिङ्ग) । جحيما (उत्तेजित अग्नि) ذاغُصَّة (घाँटीमा झुण्डिनेवाला, न घाँटीबाट तल उत्रन्छ न माथि आउँछ ।

يَوْمَ تَرْجُفُ الْأَرْضُ وَالْجِبَالُ وَكَانَتِ الْجِبَالُ كَثِيبًا مَّهِيلًا ﴿١٤﴾

(१४) जुन दिन धर्ती एवं पर्वत थर्कमान हुनेछन् तथा पर्वत मसिनो रेतका टीलाहरू (ढिस्काहरू) को समान हुनेछन् ।[1]

إِنَّا أَرْسَلْنَا إِلَيْكُمْ رَسُولًا شَاهِدًا عَلَيْكُمْ كَمَا أَرْسَلْنَا إِلَىٰ فِرْعَوْنَ رَسُولًا ﴿١٥﴾

(१५) निःसन्देह हामीले तिमीतिर पनि तिम्रा लागि साक्ष्य दिनेवाला[2] सन्देष्टा पठाएका छौं, जस्तो कि हामीले फिर्औनतिर सन्देष्टा पठाएका थियौं ।

فَعَصَىٰ فِرْعَوْنُ الرَّسُولَ فَأَخَذْنَاهُ أَخْذًا وَبِيلًا ﴿١٦﴾

(१६) त फ़िरऔंनले त्यस सन्देष्टाको अवज्ञा गऱ्यो त हामीले उसलाई घोर आपदामा समातिहाल्यौं ।[3]

فَكَيْفَ تَتَّقُونَ إِن كَفَرْتُمْ يَوْمًا يَجْعَلُ الْوِلْدَانَ شِيبًا ﴿١٧﴾

(१७) तिमी यदि काफ़िर रह्यौ भने त्यसदिन कसरी बच्नेछौ, जुन दिन बच्चाहरूलाई बूढा गरिदिनेछ ।[4]

السَّمَاءُ مُنفَطِرٌ بِهِ ۚ

(१८) जुन दिन आकाश फाट्नेछ,[5] अल्लाह

यो زَقُّوْم अथवा ضَرِيْع को खाना हुनेछ । ضَرِيْع एउटा काँडादार झाडी हो जोअति दुर्गन्धित तथा विषालु हुन्छ ।

[1]अर्थात् यो यातना त्यसदिन हुनेछ, जब धर्ती तथा पर्वत भूकम्पले तल-माथि हुनेछन् तथा ठूला-ठूला पर्वत रेतका थुप्रोका समान भएर रहनेछन् । كَثِيْب रेतको टीला, مَهِيْلًا फुस्रो, खुट्टा मुनिबाट निस्किजानेवाला रेत ।

[2]जो केयामतको दिन तिम्रा कर्तुतहरूको साक्ष्य दिनेछ ।

[3]यसमा मक्कावासीहरूलाई चेतावनी छ कि तिम्रो परिणाम पनि त्यही हुनसक्छ जो फ़िरऔनको मूसा अलैहिस्सलामलाई झुठ्लाउनुका कारण भयो ।

[4] شِيْب (शिब) أَشْيَب (अशयब) को बहुवचन हो । केयामतका दिनको भयानकताका कारण वास्तवमा बच्चाहरू बूढा हुनजानेछन्, अथवा उपमा स्वरुप यस्तो भनियो । हदीसमा पनि वर्णित छ कि "प्रलयका दिन अल्लाह तआलाले आदम अलैहिस्सलामसित भन्नेछ कि आफ्ना सन्तान मध्येबाट नरकका लागि अलग निकालिहाल । आदरणीय आदमले भन्नेछन् कि हे अल्लाह ! कुन प्रकारले ? अल्लाहले भन्नेछ कि प्रत्येक हजार मध्येबाट ९९९ । यस समय गर्भवती स्त्रीहरूका गर्भ खस्नेछन् तथा बच्चाहरू बूढा हुनेछन् ।" (अलहदीस, अलबुखारी, तफ़सीर सूरतुल हज्ज)

[5]यो يَوْم को दोस्रो विशेषण हो, त्यसदिन भयानकताले आकाश फाट्नेछन् ।

كَانَ وَعْدُهٗ مَفْعُوْلًا ﴿١٨﴾

(तआला) को यो वचनपूर्ण भएर नै रहनेछ।[1]

اِنَّ هٰذِهٖ تَذْكِرَةٌ ۚ
فَمَنْ شَآءَ اتَّخَذَ اِلٰى رَبِّهٖ سَبِيْلًا ﴿١٩﴾

(१९) निःसन्देह यो शिक्षा हो, त जसले चाहन्छ आफ्नो प्रभुतिरका मार्ग अपनाइहालोस्।

اِنَّ رَبَّكَ يَعْلَمُ اَنَّكَ تَقُوْمُ اَدْنٰى
مِنْ ثُلُثَيِ الَّيْلِ وَنِصْفَهٗ وَثُلُثَهٗ
وَطَآئِفَةٌ مِّنَ الَّذِيْنَ مَعَكَ ؕ
وَاللّٰهُ يُقَدِّرُ الَّيْلَ وَالنَّهَارَ ؕ
عَلِمَ اَنْ لَّنْ تُحْصُوْهُ فَتَابَ
عَلَيْكُمْ فَاقْرَءُوْا
مَا تَيَسَّرَ مِنَ الْقُرْاٰنِ ؕ عَلِمَ

(२०) निःसन्देह तिम्रो प्रभु राम्ररी जान्दछ कि तिमी तथा तिम्रा साथका मानिसहरूको एउटा समूह लगभग दुई तिहाई रातिका तथा आधि रातिका एवं एक तिहाई रातिका (तहज्जुदका नमाज़का लागि) उभिन्छन्,[2] तथा राति-दिनको पूर्ण अनुमान अल्लाह (तआला) लाई नै छ,[3] त्यो (राम्ररी) जान्दछ कि तिमीले त्यसलाई कदापि निर्वाह गर्नसक्ने छैनौ[4] त उसले तिमीमाथि कृपा गर्‍यो,[5]

[1]अर्थात् अल्लाह तआलाले जो मृत्युका पश्चात् जीवित गर्ने हिसाव-किताव एवं स्वर्ग नरकको जो वादा गरेको छ, यो निःसन्देह भएर रहनुछ।

[2]जब सूरःका आरम्भमा आधिरात अथवा त्यसभन्दा कम वा अधिक कयाम (नमाज़का लागि उभिनु) को आदेश दिइयो त तपाईं तथा तपाईंका साथीहरूको एक गिरोहले रातमा नमाज़ पढ्नथाले, कहिले दुई तिहाईभन्दा कम, कहिले आधिरात तथा कहिले एक तिहाई रात जस्तो कि यहाँ वर्णित छ। किन्तु एक त यो रातिको नित्य नमाज़ अति कठिन थियो, दोस्रो समयको यो अनुमान आधिरात वा तिहाई अथवा दुई तिहाई भाग नमाज पढ्नु यसभन्दा पनि निकै कठिन थियो। यसकारण अल्लाहले यस आयतमा हलुङ्गो गर्नुको आदेश उतार्‍यो, जसको अर्थ केही विद्हरूको विचारमा तहज्जुदको नमाज छाड्नुको अनुमति छ तथा केहीका विचारमा यो हो कि त्यसको फर्ज़ (अनिवार्य हुनु) लाई इस्तिहबाब (उत्तम हुनु) सित बदलदिइयो, अब यो न तपाईंका अनुयायीहरूका लागि अनिवार्य छ न नबी सल्लल्लाहु अलैहि व सल्लमका लागि। केहीको भनाई छ कि यो छुट केवल अनुयायीहरूका लागि छ। नबी सल्लल्लाहु अलैहि व सल्लमका लागि यो पढ्नु अनिवार्य थियो।

[3]अर्थात् अल्लाह त रातका घडीहरू (क्षण) गन्नसक्छ कि कति व्यतीत भयो तथा कति शेष रहेको छ। तिम्रा लागि यो अनुमान असम्भव छ।

[4]जब तिम्रा लागि रात गुजार्नुको सही अनुमान सम्भव नै छैन त तिमी नियमित समयसम्म तहज्जुदको नमाज़मा व्यस्त पनि कसरी रहन सक्छौ।

[5]अर्थात् अल्लाह तआलाले कियामुल्लैल (तहज्जुदको नमाज़) को आदेश निरस्त गरिदियो तथा अब केवल त्यसको उत्तम हुने कुरो शेष रहेको छ तथा त्यो पनि समयको आबद्धता बिना।

أَن سَيَكُونُ مِنكُم مَّرْضَىٰ ۙ وَآخَرُونَ يَضْرِبُونَ فِي الْأَرْضِ يَبْتَغُونَ مِن فَضْلِ اللَّهِ ۙ وَآخَرُونَ يُقَاتِلُونَ فِي سَبِيلِ اللَّهِ ۖ فَاقْرَءُوا مَا تَيَسَّرَ مِنْهُ ۚ وَأَقِيمُوا الصَّلَاةَ

अतः जति कुर्आन पढ्नु तिम्रा लागि सरल हुन्छ, त्यति नै पढ[1] त्यो जान्दछ कि तिमीमध्ये केही रोगी पनि हुनेछन्, केही अन्य धर्तीमा भ्रमण गरेर अल्लाहको कृपा (अर्थात् जीविका पनि) खोज्नेछन्[2] तथा केहीले

आधि रात, तिहाई रात तथा दुई तिहाई रातको आवद्धता पनि अनिवार्य छैन । र यदि तिमीले थोरै समय लगाएर दुई रकाअत पनि पढ्नेछौ भने अल्लाहका पास तहज्जुदको नमाजका पुण्यका पात्र बन्नेछौ, तैपनि यदि कोही आठ रकाअत तहज्जुदको नमाजको प्रबन्ध गर्दछ जस्तो कि नबी सल्लल्लाहु अलैहि व सल्लमका तरीका थियो त यो अति उत्तम हुनेछ तथा नबी सल्लल्लाहु अलैहि व सल्लमको अनुगामी हुनेछ ।

[1] فَاقْرَأُوا सित अभिप्राय हो فصلّو तथा कुर्आनसित अभिप्राय اَلصَّلٰوةَ (नमाज़) हो । रातिको नमाज़मा क़याम (उभिनु) लामो हुन्छ तथा कुर्आन अधिक पढिन्छ, अतः तहज्जुदको नमाजलाई नै कुर्आन भनियो । जस्तै नमाज़मा सूरः फ़ातिहा अति आवश्यक छ, यसकारण अल्लाहले हदीस कुदसीमा, जो सूरः फ़ातिहाका भाष्यमा गुज्रिसकेको छ, सूरः फ़ातिहालाई नमाज़सित व्यंजित गरेको छ । «قسمتُ الصلاة بيني وبين عبدي» (अल-हदीस) यसका लागि "जति कुर्आन पढ्नु सहज हुन्छ पढ" को अर्थ हो, रातिमा जति नमाज पढ्न सक्छौ पढ । यसकारण न समयको पाबन्दी छ र न रकाअतको । यस आयतबाट केही मानिस यो तर्क निकाल्दछन् कि नमाजमा सूरः फ़ातिहा पढ्न जरुरी छैन, जति तथा जहाँबाट कसैका लागि सहज हुनेछ पढ्नेछ त नमाज भइहाल्नेछ । किन्तु प्रथम त यहाँ किराअत् (पढ्नु) नमाज़का अर्थमा छ जस्तो कि हामीले वर्णन गऱ्यौं । यसकारण आयतको सम्बन्ध यससित छैन कि नमाज़मा कति किराअत (कुर्आन पढ्नु) आवश्यक छ ? अर्को, यदि यसको सम्बन्ध किरातसित मानिन्छ तैपनि यो तर्क आफूभित्र कुनै शक्ति राख्दैन । किनकि مَا تَيَسَّرَ को व्याख्या स्वयं नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले गरिदिनु भएको छ कि कमसेकम क़िराअत जसको बिना नमाज़ हुनेछैन त्यो सूरः फ़ातिहा हो । यसकारण उहाँले भन्नुभयो कि यसलाई अवश्य पढ, जस्तो कि सहीह एवं अति दृढ एवं स्पष्ट हदीसहरूमा यसको आदेश छ । नबीको यस व्याख्याका विपरीत यो भन्नु कि नमाजमा सूरः फातिहा अनिवार्य छैन अपितु कुनै पनि सूरः तथा एउटा आयत पढिहाल नमाज़ हुनेछ ठूलो दुस्साहसबाट नबी सल्लल्लाहु अलैहि व सल्लमका हदीसहरूसित विमुखताको धिक्कृत प्रदर्शन हो । तथा इमामहरूका कथनका विपरीत पनि जो उनीहरूले धर्मबोध (फ़िक़्ह) का नियमका किताबहरूमा लेखेका छन् कि यस आयतबाट इमामका पछाडि सूरः फ़ातिहा नपढ्नुका तर्क दिनु वैध छैन, यसकारण कि यी दुबै आयातहरू परस्पर विपरीत छन् ।

[2] अर्थात् व्यापार तथा व्यवसायका लागि यात्रा गर्नु तथा एक नगरबाट अर्को नगर अथवा एक देशबाट अर्को देश जानुपर्नेछ ।

وَاٰتُوا الزَّكٰوةَ وَاَقْرِضُوا اللّٰهَ قَرْضًا حَسَنًا ۭ وَمَا تُقَدِّمُوْا لِاَنْفُسِكُمْ مِّنْ خَيْرٍ تَجِدُوْهُ عِنْدَ اللّٰهِ هُوَ خَيْرًا وَّاَعْظَمَ اَجْرًا ۭ وَاسْتَغْفِرُوا اللّٰهَ ۭ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢٠﴾

अल्लाह तआ़लाका मार्गमा धर्मयुद्ध पनि गर्नेछन्,[१] त तिमी सरलतापूर्वक जति (कुर्आन) पढ्न सक्छौ पढ ।[२] तथा नमाज़ नियमितताले पढ[३] तथा ज़कात (पनि) दिँदैरह तथा अल्लाह तआ़लालाई उत्तम ऋण देउ,[४] तथा जो पुण्य तिमीले आफ्ना लागि अगाडि पठाउनेछौ त्यसलाई अल्लाह (तआ़ला) कहाँ सर्वोत्तम रुपमा प्रतिफलमा अत्याधिक पाउनेछौ ।[५] र अल्लाह तआ़लासित क्षमा माँगिराख । नि:सन्देह अल्लाह तआ़ला क्षमाशील, कृपालु छ ।

## सूरतुल मुद्दस्सिर–७४

سُوْرَةُ الْمُدَّثِّرِ

सूर: मुद्दस्सिर मक्कामा अवतरित भएको तथा यसमा ५६ आयातहरू एवं दुई रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

يٰٓاَيُّهَا الْمُدَّثِّرُ ﴿١﴾

(१) हे लुगा ओढ्नेवाला ।[६]

---

[१]यसैप्रकार जिहाद (धर्मयुद्ध) मा पनि कठिन यात्राहरू गर्नुपर्दछ । यी तीनवटै कुरा रोग, यात्रा तथा जिहाद पालैपालो सबैका समक्ष आउँछन् । यसकारण अल्लाह तआ़लाले तहज्जुदमा छुट दिइदिएको छ किनकि यिनमा कठिनाईहरू छन् ।

[२]छुटका कारणका साथ छुटको यो आदेश पुन: बयान गरियो ।

[३]अर्थात् पाँच नमाज़ जो फर्ज़ (अनिवार्य) छन् ।

[४]अर्थात् अल्लाहका मार्गमा आवश्यकता अनुसार खर्च गर । यसलाई उत्तम ऋण भनिएको छ कि अल्लाहले त्यसको प्रतिफल सात सय गुना बरु त्यसभन्दा अधिक प्रदान गर्नेछ ।

[५]अर्थात् ऐच्छिक नमाज़हरू, दान, (दक्षिणा) तथा जो अन्य पुण्यका काम गर्नेछन्, त्यसको अल्लाहका निकट उत्तम प्रतिफल पाउनेछौ । अधिकतर भाष्यकारहरूले यस सूर:का आधा भागलाई मदनी तथा आधा भागलाई मक्की मानेका छन् जसको कारण आयत नं. २० हो जो मदनी हो ।

[६]सर्वप्रथम जुन प्रकाशना उतऱ्यो त्यो اِقْرَأْ بِاسْمِ رَبِّكَ الَّذِي خَلَقَ हो । त्यसका पश्चात प्रकाशनामा विलम्ब भयो तथा नबी सल्लल्लाहु अलैहि व सल्लम

(२) उभिहाल तथा सावधान गरिदेउ ।[1] قُمْ فَأَنذِرْ ۝٢

(३) तथा आफ्नो प्रभुकै महिमा वर्णन गर । وَرَبَّكَ فَكَبِّرْ ۝٣

(४) तथा आफ्ना वस्त्रहरूलाई पवित्र राख्ने गर ।[2] وَثِيَابَكَ فَطَهِّرْ ۝٤

(५) र अपवित्रतालाई छाडिदेउ ।[3] وَالرُّجْزَ فَاهْجُرْ ۝٥

(६) तथा उपकार गरी अधिक लिनुको इच्छा नगर ।[4] وَلَا تَمْنُن تَسْتَكْثِرُ ۝٦

(७) तथा आफ्नो प्रभुका मार्गमा धैर्य राख । وَلِرَبِّكَ فَاصْبِرْ ۝٧

(८) त जब नरसिंघामा फुकिनेछ । فَإِذَا نُقِرَ فِي النَّاقُورِ ۝٨

(९) त त्यो दिन बहुतै कठोर दिन हुनेछ । فَذَٰلِكَ يَوْمَئِذٍ يَوْمٌ عَسِيرٌ ۝٩

(१०) जो काफिरहरूका लागि सरल हुनेछैन ।[5] عَلَى الْكَافِرِينَ غَيْرُ يَسِيرٍ ۝١٠

अति व्याकूल हुनुभयो तथा चिन्तित रहन थाल्नुभो । एकदिन अकस्मात त्यही फरिश्ता जो हिरा (पर्वत) को गुफामा प्रकाशना लिएर प्रथम पटक आएको थियो । उहाँ सल्लल्लाहु अलैहि व सल्लमले देख्नुभयो कि धर्ती तथा आकाशको बीच एउटा कुर्सीमा विराजमान छ, जसबाट उहाँमाथि एउटा भय आयो तथा घर गएर घरवालाहरू सित भन्नुभयो कि मलाई लुगा ओढाइदेऊ, मलाई लुगा ओढाइदेऊ, अतः उनले उहाँलाई एउटा लुगा ओढाइदिए । यसै स्थितिमा यो प्रकाशना अवतरित भयो (सहीह बुखारी तथा मुस्लिम सूरतुल मुद्दस्सीर तथा किताबुल ईमान) यस आधारमा यो दोस्रो वहृय (प्रकाशना) तथा प्रकाशनाका विलम्बका पश्चात प्रथम प्रकाशना हो ।

[1]अर्थात् मक्कावासीहरूलाई तर्साऊ यदि उनीहरूले ईमान स्वीकार गर्दैनन् ।

[2]अर्थात् मन तथा विचारका साथ लुगा पनि पवित्र राख । यो आदेश यसकारण दियो कि मक्काका मुश्रिक पवित्रताको ध्यान राख्दैनथे ।

[3]अर्थात् मूर्तिहरूको पूजा त्यागदेऊ । यो वास्तवमा मानिसहरूलाई उहाँका माध्यमबाट आदेश दिइदैछ ।

[4]अर्थात् उपकार गरेर यो इच्छा नराख कि प्रतिफलमा यसभन्दा अधिक पाइनेछ ।

[5]अर्थात् प्रलयका दिन काफ़िरहरूका लागि भारी (गम्भीर) हुनेछ किनकि त्यसदिन कुफ्रको परिणाम उनलाई भोग्नुपर्ने हुन्छ जसलाई उनी संसारमा गरिरहे ।

ذَرۡنِي وَمَنۡ خَلَقۡتُ وَحِيدٗا ۝١١

(११) मलाई तथा उसलाई छाडिदेउ, जसलाई मैले एक्लो पैदा गरेको छु ।[1]

وَجَعَلۡتُ لَهُۥ مَالٗا مَّمۡدُودٗا ۝١٢

(१२) तथा त्यसलाई अत्याधिक दिएको छु ।

وَبَنِينَ شُهُودٗا ۝١٣

(१३) तथा उपस्थित रहनेवाला पुत्र पनि ।[2]

وَمَهَّدتُّ لَهُۥ تَمۡهِيدٗا ۝١٤

(१४) तथा मैले त्यसलाई धेरै समृद्धि दिएको छु ।[3]

ثُمَّ يَطۡمَعُ أَنۡ أَزِيدَ ۝١٥

(१५) तैपनि उसको कामना छ कि मैले उसलाई अझ अधिक दिऊ ।[4]

كَلَّآۖ إِنَّهُۥ كَانَ لِأٓيَٰتِنَا عَنِيدٗا ۝١٦

(१६) होइन होइन,[5] त्यो हाम्रा आयतहरूको विरोधी हो ।[6]

سَأُرۡهِقُهُۥ صَعُودًا ۝١٧

(१७) शीघ्र नै मैले उसलाई एउटा कठिन उकालो उक्लिन लगाउनेछु ।

---

[1]यो शब्द चेतावनी तथा धम्कीको लागि छ कि त्यसलाई जसलाई मैले आमाका पेटबाट एक्लो पैदा गरें, त्यससित न धन थियो न सन्तान, तथा मलाई एक्लो छाडिदेऊ । अर्थात् म स्वयं नै त्यससित निपट्ने छु । भन्दछन् कि यो वलीद पुत्र मुगीरातिर संकेत छ । यो कुफ्र तथा उपद्रवमा निकै बढिसकेको थियो, यसकारण विशेषरुपले त्यसको चर्चा गरिएको छ ।

[2]त्यसलाई अल्लाहले पुत्र प्रदान गरेको थियो तथा उनी प्रत्येक समय त्यसका पासमा नै रहन्थे, घरमा धनको अधिकता थियो । यसकारण पुत्रहरूलाई व्यापार का लागि बाहिर जानुको आवश्यकता हुँदैनथ्यो । केही विद्हरू भन्दछन् कि यी पुत्र सात थिए, केही बाह्र तथा केही तेह्र बताउँछन्, यिनीमध्ये तीन मुसलमान भएका थिए खालिद, हिशाम तथा वलीद रज़ियल्लाहु अन्हु । (फ़तहुल क़दीर)

[3]अर्थात् धन-सम्पत्तिमा प्रधानता तथा प्रमुखतामा एवं दीर्घ आयुमा ।

[4]अर्थात् कुफ्र तथा अवज्ञाका उपरान्त पनि त्यसको आकांक्षा छ कि म त्यसलाई अझ अधिक दिऊ ।

[5]अर्थात् मैले त्यसलाई अधिक दिनेछैन ।

[6]यो كَلَّا को कारण हो عَنِيدٌ त्यस व्यक्तिलाई भन्दछन् जो सत्यलाई जान्दा जान्दै त्यसको विरोध तथा खण्डन गर्दछ ।

[7]अर्थात् त्यसलाई यस्तो यातनामा ग्रस्त गर्नेछु जसलाई सहन गर्नु अति कठिन हुनेछ । केही धर्मज्ञाताहरू भन्दछन् कि नरकमा अग्निको पर्वत हुनेछ जसमाथि त्यसलाई चढाइनेछ । إِرْهَاق को अर्थ हो मानिसमाथि गह्रुंगो कुरा लाद्दिनु (फतहुल कदीर)

إِنَّهُۥ فَكَّرَ وَقَدَّرَ ﴿١٨﴾
(१८) उसले विचार गरेर अनुमान गऱ्यो ।[1]

فَقُتِلَ كَيْفَ قَدَّرَ ﴿١٩﴾
(१९) त्यसको नाश होस् ! त्यसले कसरी अनुमान गऱ्यो ?

ثُمَّ قُتِلَ كَيْفَ قَدَّرَ ﴿٢٠﴾
(२०) त्यो पुनः नष्ट होस् ! कुन प्रकारले अनुमान गऱ्यो ?[2]

ثُمَّ نَظَرَ ﴿٢١﴾
(२१) उसले फेरि देख्यो ।[3]

ثُمَّ عَبَسَ وَبَسَرَ ﴿٢٢﴾
(२२) अनि अनुहार खुम्च्यायो तथा मुख बिगाऱ्यो ।[4]

ثُمَّ أَدْبَرَ وَاسْتَكْبَرَ ﴿٢٣﴾
(२३) त्यसपछि पछाडि हट्यो तथा गर्व गऱ्यो ।[5]

فَقَالَ إِنْ هَٰذَآ إِلَّا سِحْرٌ يُؤْثَرُ ﴿٢٤﴾
(२४) तथा भन्नलाग्यो कि यो त मात्र जादू हो जो नकल गरिन्छ ।[6]

إِنْ هَٰذَآ إِلَّا قَوْلُ الْبَشَرِ ﴿٢٥﴾
(२५) (यो) मनुष्यका कथनका अतिरिक्त केही पनि होइन ।

سَأُصْلِيهِ سَقَرَ ﴿٢٦﴾
(२६) म शीघ्र नै त्यसलाई (सफरमा) नरक्मा हाल्नेछु ।

وَمَآ أَدْرَىٰكَ مَا سَقَرُ ﴿٢٧﴾
(२७) तथा तिमीलाई के थाहा[7] कि नरक के कुरो हो ?

---

[1]अर्थात् पवित्र कुर्आन तथा नबी सल्लल्लाहु अलैहि व सल्लमको सन्देश सुनेर त्यसले यस विषयमा सोच्यो कि म यसका के उत्तर दिऊ ? तथा आफ्नो मनमा त्यसले त्यो तयार गऱ्यो ।

[2]यी त्यसका सम्बन्धमा अभिशापका शब्द हुन् कि नाश होस्, मारियोस्, के कुरा उसले सोचेको छ ?

[3]अर्थात् फेरि विचार गऱ्यो कि कुर्आनको खण्डन कुन प्रकार सम्भव छ ।

[4]अर्थात् यो उत्तर विचारदाखेरि मुख खुम्च्यायो तथा बङ्ग्यायो जस्तो कि साधारणतः कुनै गम्भीर कुरामा विचार गर्दाखेरि मानिस यस्तै नै गर्दछ ।

[5]अर्थात् सत्यबाट मुख फर्कायो तथा ईमान स्वीकार गर्नबाट अहङ्कार गऱ्यो ।

[6]अर्थात् योकसैबाट सिकेर आयो तथा त्यहाँबाट नक्कल गऱ्यो र दावा गऱ्यो कि यो अल्लाहद्वारा अवतरित गरिएको हो ।

[7]नरकका नामहरू अथवा श्रेणीहरूमध्ये एउटाको नाम "सकर" पनि हो ।

لَا تُبْقِي وَلَا تَذَرُ ﴿٢٨﴾

(२८) न त्यो शेष राख्दछ तथा न छाड्दछ।[1]

لَوَّاحَةٌ لِّلْبَشَرِ ﴿٢٩﴾

(२९) छालालाई पोलिदिन्छ।

عَلَيْهَا تِسْعَةَ عَشَرَ ﴿٣٠﴾

(३०) तथा त्यसमाथि उन्नाईस (फरिश्ताहरू नियुक्त) छन्।[2]

وَمَا جَعَلْنَا أَصْحَابَ النَّارِ إِلَّا مَلَائِكَةً ۙ وَمَا جَعَلْنَا عِدَّتَهُمْ إِلَّا فِتْنَةً لِّلَّذِينَ كَفَرُوا لِيَسْتَيْقِنَ الَّذِينَ أُوتُوا الْكِتَابَ وَيَزْدَادَ الَّذِينَ آمَنُوا إِيمَانًا ۙ وَلَا يَرْتَابَ الَّذِينَ أُوتُوا الْكِتَابَ وَالْمُؤْمِنُونَ ۙ وَلِيَقُولَ الَّذِينَ فِي قُلُوبِهِم مَّرَضٌ وَالْكَافِرُونَ

(३१) तथा हामीले नरकका रक्षक केवल फरिश्ताहरू राखेका छौं। तथा हामीले उनको संख्या केवल काफ़िरहरूको परीक्षाका लागि निर्धारित गरेका छौं[3] ताकि अहले किताब (विश्वास) गरिहालून्[4] तथा ईमान वालाहरू ईमानमा बढेर जाऊन्।[5] तथा अहले किताब एवं मुसलमान संदेह नगरुन्, तथा जसका हृदयमा रोग छ तिनीहरू तथा काफ़िर भनून कि यस उदाहरणबाट अल्लाह तआलाको के तात्पर्य छ ?[6] यस

[1]उनका शरीरमा मासु छाड्नेछ न हड्डी। अर्थात् अभिप्राय यो हो कि नरकवासीहरूलाई जीवित छाड्नेछ न मृत। لا يموت فيها و لا يحيى

[2]अर्थात् नरकमा द्वारपालका रूपमा १९ फरिश्ता नियुक्त छन्।

[3]यो कुरैशका मूर्तिपूजकहरूको खण्डन हो, जब नरकका अधिकारीहरूको अल्लाहले चर्चा गऱ्यो त अबूजहलले कुरैशका समूहलाई सम्बोधित गर्दै भन्यो कि तिमीमध्ये प्रत्येक दश व्यक्तिहरूको गिरोह एक-एक फरिश्ताका लागि पर्याप्त हुनेछैन। केही भन्दछन् कि किलदा नामक व्यक्तिले जसलाई आफ्नो शक्तिमा बडो गर्व थियो, भन्यो कि तिमी सबै मात्र दुई फरिश्ता सम्हाल्नु, सत्र फरिश्ताहरूलाई त म एक्लो नै हेर्नेछु। भन्दछन् कि त्यसैले रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमलाई कुश्तीको पनि कैयन पटक चुनौती दियो तथा प्रत्येक पटक पराजित भयो तथा ईमान स्वीकारेन। भन्दछन् कि यसका अतिरिक्त रुकाना पुत्र अब्दे यज़ीदका साथ पनि उहाँले कुश्ती लड्नु भएको थियो किन्तु उनी पराजित भएर मुसलमान भइहालेका थिए। (इब्ने कसीर) अभिप्राय यो हो कि यो संख्या पनि उनका परिहास अर्थात् परीक्षाको हेतु बन्यो। (सहीह बुख़ारी मुस्लिम)

[4]अर्थात् यो जानीहालून कि यो रसूल सत्य छ तथा त्यससित त्यही कुरा गर्नु भएको छ जो पूर्वका ग्रन्थहरूमा पनि अंकित छ।

[5]कि अहले किताबले उनका पैग़म्बरको कुरोको पुष्टि गरेका छन्।

[6]हृदयका रोगीसित अभिप्राय मुनाफ़िक (अवसरवादी) हुन् अथवा ती हुन् जसका हृदयमा

مَاذَآ أَرَادَ اللَّهُ بِهَٰذَا مَثَلًا ۚ كَذَٰلِكَ يُضِلُّ اللَّهُ مَن يَشَآءُ وَيَهْدِى مَن يَشَآءُ ۚ وَمَا يَعْلَمُ جُنُودَ رَبِّكَ إِلَّا هُوَ ۚ وَمَا هِىَ إِلَّا ذِكْرَىٰ لِلْبَشَرِ ﴿٣١﴾

प्रकार अल्लाह तआला जसलाई चाहन्छ मार्ग विचलित गर्दछ तथा जसलाई चाहन्छ मार्गदर्शन गर्छ[1] तथा तिम्रा प्रभुका सेनाहरूलाई त्यसका अतिरिक्त कोही जान्दैन[2] यो समस्त मनुष्यका लागि (साक्षात) शिक्षा (एवं उपदेश) हो ।[3]

كَلَّا وَالْقَمَرِ ﴿٣٢﴾

(३२) कदापि होइन ।[4] चन्द्रमाको सौगन्ध ।

وَاللَّيْلِ إِذْ أَدْبَرَ ﴿٣٣﴾

(३३) तथा रात्रिको जब त्यो पछि हट्छ ।

وَالصُّبْحِ إِذَآ أَسْفَرَ ﴿٣٤﴾

(३४) तथा प्रात:को जब त्यो प्रकाशित हुनजान्छ ।

إِنَّهَا لَإِحْدَى الْكُبَرِ ﴿٣٥﴾

(३५) कि (नि:सन्देह त्यो नरक) ठुला वस्तुहरूमध्ये एउटा हो ।[5]

---

शंकाहरू थिए, किनकि मक्कामा मुनाफ़िक नै थिएनन् अर्थात् यो सोध्नेछन् कि उनको संख्यालाई यहाँ चर्चा गर्नुमा अल्लाहको के हिकमत छ ?

[1]अर्थात् विगतका विचलनको जस्तै जसलाई चाहन्छ कुमार्ग तथा जसलाई चाहन्छ मार्गदर्शन गर्दछ यसमा जो हिकमत हुन्छ, त्यसलाई केवल अल्लाह नै जान्दछ ।

[2]अर्थात् यी काफ़िर तथा मुश्रिक बुझ्दछन् कि नरकमा १९ फरिश्ता नै त छन्, जसमाथि नियन्त्रण पाउनु कुनचाहिँ ठूलो काम हो ? परन्तु उनलाई थाहा छैन कि प्रभुको सेना त यति छ जसलाई अल्लाहका अतिरिक्त कोही जान्दैन । केवल फरिश्ता नै यति संख्यामा छन् कि ७० हजार फरिश्ता नित्य दिन अल्लाहको उपासनाका लागि "बैतुल मामूर" मा प्रवेश गर्दछन्, अनि प्रलयसम्म उनको पालो आउने छैन । (सहीह बुख़ारी तथा मुस्लिम)

[3]अर्थात् यो नरक तथा त्यसका लागि नियुक्त फरिश्ताहरू मानिसहरूको शिक्षा एवं उपदेशका लागि छन् कि सम्भवत: उनी अवज्ञाबाट रोकियून् ।

[4] كَلَّا यो मक्कावासीहरूका भ्रमको इन्कार हो, अर्थात् जो उनीहरू यो बुझ्दछन् कि हामी फरिश्ताहरूलाई पराजित गर्नेछौं कदापि यस्तो हुनेछैन । सौगन्ध छ चन्द्रमाको तथा रात्रिको जब तिनी पछाडि हटून् तथा जान थालून् ।

[5]यो सौगन्धको उत्तर हो । كُبَرٌ (कुबर) كُبْرَى (कुबरा) को बहुवचन हो । अति महत्वपूर्ण कुराहरूको शपथका पश्चात अल्लाहले नरकको महानता तथा भयानकताको वर्णन गरेको छ, जसबाट त्यसको महानतामा कुनै सन्देह रहँदैन ।

نَذِيرًا لِّلْبَشَرِ ﴿٣٦﴾
(३६) मनुष्यलाई तर्साउनेवाला ।[1]

لِمَن شَاءَ مِنكُمْ أَن يَتَقَدَّمَ أَوْ يَتَأَخَّرَ ﴿٣٧﴾
(३७) ती व्यक्तिहरूका लागि जो तिमीमध्ये अगाडि बढ्न चाहन्छन् अथवा पछाडि हट्न चाहन्छन् ।[2]

كُلُّ نَفْسٍ بِمَا كَسَبَتْ رَهِينَةٌ ﴿٣٨﴾
(३८) प्रत्येक व्यक्ति आफ्ना कर्महरूका लागि गिरवी छ ।[3]

إِلَّا أَصْحَابَ الْيَمِينِ ﴿٣٩﴾
(३९) परन्तु दायाँ हातवालाहरू ।[4]

فِي جَنَّاتٍ يَتَسَاءَلُونَ ﴿٤٠﴾
(४०) (कि) उनीहरू स्वर्गमा (बसेको अवस्थामा) प्रश्न गरिराखेका हुनेछन् ।[5]

عَنِ الْمُجْرِمِينَ ﴿٤١﴾
(४१) पापीहरूसित ।

مَا سَلَكَكُمْ فِي سَقَرَ ﴿٤٢﴾
(४२) तिमीलाई नरकमा कुन कुराले हाल्यो ।

قَالُوا لَمْ نَكُ مِنَ الْمُصَلِّينَ ﴿٤٣﴾
(४३) उनीहरूले उत्तर दिनेछन् कि हामी नमाजी थिएनौं ।

وَلَمْ نَكُ نُطْعِمُ الْمِسْكِينَ ﴿٤٤﴾
(४४) न भोकाहरूलाई खाना खुवाउँथ्यौं ।

[1]अर्थात् यो नरक तर्साउनेवाली छ अथवा त्यस तर्साउनेवालीसित अभिप्राय नवी सल्लल्लाहु अलैहि वसल्लम हुन् अथवा पवित्र कुर्आन हो, किनकि कुर्आन पनि आफूले वर्णन गरिएको वचन तथा धम्कीको आधारमा मानव जातिको लागि सचेत गर्नेवाला छ ।

[2]अर्थात् ईमान तथा आज्ञाकारीतामा अगाडि बढ्न चाहोस् अथवा त्यसभन्दा पछाडि हट्न चाहोस् । अभिप्राय यो हो कि चेतावनी प्रत्येकका लागि छ जसले ईमान ल्याओस् । (विश्वास गरोस्) अथवा कुफ्र (इन्कार) गरोस् ।

[3] رهـن गिरवी (धितो) राख्नलाई भन्दछन् । अर्थात् प्रत्येक व्यक्ति आफ्ना कर्मको गिरवी छ । त्यस कर्मले त्यसलाई याचनाबाट मुक्त गराउनेछ (यदि सदाचारी हुनेछ) अथवा नष्ट गरिदिनेछ । (यदि दुराचारी हुनेछ)

[4]अर्थात् उनी आफ्ना पापहरूका बन्दी हुने छैनन्, बरु आफ्ना सत्कर्महरूका कारण स्वतन्त्र हुनेछन् ।

[5] فِي جَنَّـات यो أصحابُ اليَمين को स्थिति बताउनका लागि छ स्वर्गीय अट्टालिका (महलमा) बसेर नरकवासीहरूसित प्रश्न गर्नेछन् ।

[6]नमाज़ अल्लाहका अधिकारमा छ तथा निर्धनहरूलाई खुवाउनु भक्तहरूका अधिकारहरूमध्ये छ । अभिप्राय यो भयो कि हामीले अल्लाहका अधिकार पूरा गऱ्यौं न भक्तहरूका ।

وَكُنَّا نَخُوضُ مَعَ الْخَائِضِينَ ﴿٤٥﴾

(४५) तथा हामी बाद-विवाद (इन्कार) गर्नेहरूका साथ बाद-विवादमा व्यस्त रहने गर्थ्यौं ।[1]

وَكُنَّا نُكَذِّبُ بِيَوْمِ الدِّينِ ﴿٤٦﴾

(४६) तथा हामीले प्रतिफलका दिनलाई भुठ्लाउँथ्यौं ।

حَتَّىٰ أَتَانَا الْيَقِينُ ﴿٤٧﴾

(४७) यहाँसम्मकि हाम्रो मृत्यु आइपुग्यो ।[2]

فَمَا تَنفَعُهُمْ شَفَاعَةُ الشَّافِعِينَ ﴿٤٨﴾

(४८) त उनीहरूलाई सिफारिस गर्नेहरूको सिफारिस लाभप्रद हुनेछैन ।[3]

فَمَا لَهُمْ عَنِ التَّذْكِرَةِ مُعْرِضِينَ ﴿٤٩﴾

(४९) उनीहरूलाई के भएको छ कि उनीहरू शिक्षाबाट मुख फर्काइराखेका छन् ?

كَأَنَّهُمْ حُمُرٌ مُّسْتَنفِرَةٌ ﴿٥٠﴾

(५०) जस्तो कि उनीहरू भडकिएका गधाहरू हुन् ।

فَرَّتْ مِن قَسْوَرَةٍ ﴿٥١﴾

(५१) जो शेरबाट भागेका हुन् ।[4]

بَلْ يُرِيدُ كُلُّ امْرِئٍ مِّنْهُمْ أَن يُؤْتَىٰ صُحُفًا مُّنَشَّرَةً ﴿٥٢﴾

(५२) अपितु उनीहरूमध्ये प्रत्येक व्यक्ति चाहन्छ कि त्यसलाई स्पष्ट किताबहरू दिइयोस् ।[5]

---

[1]विवाद तथा मार्ग-विचलनको पक्षमा संलग्नताले भाग लिन्थे ।

[2] يقين (निश्चित) को अर्थ मृत्यु हो, जस्तो अल्लाहले अर्को स्थानमा भन्यो:

﴿وَاعْبُدْ رَبَّكَ حَتَّىٰ يَأْتِيَكَ الْيَقِينُ﴾

"आफ्ना प्रभुको उपासना मृत्यु नआउन्जेल गरिराख ।" (अल-हिज्र-९९)

[3]अर्थात् जो उपर्युक्त दुर्गुणहरूले युक्त हुनेछ, त्यसलाई कसैको सिफारिस पनि लाभ पुऱ्याउने छैन, किनकि उनी कुफ्रका कारण सिफारिसका पात्र हुनेछैन । सिफारिस त मात्र उनका लागि लाभप्रद हुनेछ जो ईमानका कारण सिफारिशका पात्र हुनेछन् अल्लाहतिरबाट सिफारिशको अनुमति पनि उनीहरूका लागि प्राप्त हुनेछ न कि प्रत्येकका लागि ।

[4]अर्थात् यिनी सत्यबाट भड्किने तथा मुख फर्काउनमा यस्ता छन्, जस्तो वनका भयभीत गधाहरू सिंहबाट भाग्दछन् जब उनी तिनका शिकार गर्न चाहन्छन् । قَسْوَرَة को अर्थ सिंह हो । केहीले धनुर्धर (तीर चलाउनेवाला) अर्थ गरेका छन् ।

[5]अर्थात् प्रत्येकका हातमा अल्लाहको तर्फबाट एउटा खुला किताब उतरोस् जसमा लेखिएको होस् कि मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम अल्लाहको

كَلَّا بَل لَّا يَخَافُونَ الْآخِرَةَ ﴿٥٣﴾

(५३) कदापि यस्तो (हुनसक्दैन), बरु यिनी केयामत (प्रलय) बाट निर्भय छन् ।[1]

كَلَّا إِنَّهُ تَذْكِرَةٌ ﴿٥٤﴾

(५४) कदापि होइन ! यो (कुर्आन) एउटा शिक्षा हो ।[2]

فَمَن شَاءَ ذَكَرَهُ ﴿٥٥﴾

(५५) अब जो चाहन्छ यसबाट शिक्षा प्राप्त गरोस् ।

وَمَا يَذْكُرُونَ إِلَّا أَن يَشَاءَ اللَّهُ ۚ هُوَ أَهْلُ التَّقْوَىٰ وَأَهْلُ الْمَغْفِرَةِ ﴿٥٦﴾

(५६) तथा उनीहरू त्यसबेला शिक्षा प्राप्त गर्नेछन्, जब अल्लाह तआ़ला चाहन्छ[3] त्यो यसै योग्य छ कि उससित तर्सुन तथा यस योग्य पनि कि त्यसले क्षमा गरोस् ।[4]

## सूरतुल क़ियाम:-७५

سُورَةُ الْقِيَامَةِ

सूर: क़ियाम: मक्कामा अवतरित भएको तथा यसमा चालीस आयतहरू एवं दुई रुकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

---

रसूल (सन्देष्टा) । केहीले यो भावार्थ गरेका छन् कि बिना कर्म यिनी यातनाबाट मुक्ति चाहन्छन्, अर्थात् प्रत्येकलाई मुक्ति-लेख प्राप्त होस् । (इब्ने कसीर)

[1]अर्थात् उनको उपद्रवका कारण आख़िरत (परलोक) प्रति अविश्वास तथा त्यसको इन्कार हो जसले उनलाई निर्भय गरिदिएको छ ।

[2]परन्तु त्यसका लागि जो यस कुर्आनका सदुपदेशहरूबाट शिक्षा ग्रहण गर्न चाहुन् ।

[3]अर्थात् यस कुरआनबाट मार्गदर्शन तथा सदुउपदेश त्यसलाई नै प्राप्त हुनेछ जसलाई अल्लाहले चाहनेछ । ﴿وَمَا تَشَاءُونَ إِلَّا أَن يَشَاءَ اللَّهُ رَبُّ الْعَالَمِينَ﴾

"तथा तिमी जगतका प्रभुले नचाहिकन केही पनि चाहन सक्दैनौ ।" (अत्तकबीर-२९)

[4]अर्थात् त्यो अल्लाह नै यस योग्य छ कि त्यससित तर्सियोस् तथा त्यही क्षमादानका अधिकार राख्दछ । अत: त्यही यस कुराका योग्य छ कि त्यसका आज्ञाको पालन गरियोस् तथा त्यसको अवज्ञाबाट बचियोस् ताकि मानिस त्यसको दया तथा क्षमाका योग्य बन्न सकोस् ।

لَآ أُقۡسِمُ بِيَوۡمِ ٱلۡقِيَٰمَةِ ①

(१) म सौगन्ध खान्छु केयामत (प्रलय) का दिनको ।[१]

وَلَآ أُقۡسِمُ بِٱلنَّفۡسِ ٱللَّوَّامَةِ ②

(२) तथा सौगन्ध खान्छु त्यस मनको जो धिक्कार (निन्दा) गर्नेवाला छ ।[२]

أَيَحۡسَبُ ٱلۡإِنسَٰنُ أَلَّن نَّجۡمَعَ عِظَامَهُۥ ③

(३) के मनुष्य यो विचार गर्दछ कि हामीले त्यसका हड्डीहरू एकत्रित गर्ने नै छैनौ ?[३]

بَلَىٰ قَٰدِرِينَ عَلَىٰٓ أَن نُّسَوِّيَ بَنَانَهُۥ ④

(४) हो, अवश्य गर्नेछौ हामीलाई सामर्थ्य छ कि त्यसको हामीले उसको (औंला) को टुप्पालाई ठीक गरिदेऔं ।[४]

بَلۡ يُرِيدُ ٱلۡإِنسَٰنُ لِيَفۡجُرَ أَمَامَهُۥ ⑤

(५) अपितु मनुष्य त चाहन्छ कि अगाडि-अगाडि अवज्ञा (एवं अवहेलना) गर्दैजाओस् ।[५]

---

[१] أُقۡسِمُ मा لَا अधिक छ जो अरबीको एउटा भाषाशैली हो जस्तो ﴿مَا مَنَعَكَ أَلَّا تَسۡجُدَ﴾ (अल-आराफ़-१२) तथा ﴿لِّئَلَّا يَعۡلَمَ أَهۡلُ ٱلۡكِتَٰبِ﴾ (अल-हदीद-२९) तथा अन्य धेरै स्थानमा छ । केही भन्दछन् कि सौगन्धभन्दा पहिला काफ़िरहरूको कुराको इन्कार छ, उनी भन्दथे कि मृत्युका पश्चात कुनै जीवन छैन । لَا द्वारा भनिएको छ कि जस्तो तिमी भन्दछौ कुरा यस्तो छैन म (अल्लाह) प्रलयका दिनको सौगन्ध खान्छु । क़ेयामत (प्रलय) का दिनको सौगन्ध खानुबाट उद्देश्य त्यसका महत्व तथा गम्भीरतालाई स्पष्ट गर्नु हो ।

[२] अर्थात् भलाईमा पनि गर्दछ कि अधिक किन गरेन तथा कुकर्ममा पनि यसबाट किन रोकिन्न ? संसारमा पनि जसको अर्न्तआत्मा जागरुक हुन्छ तिनको आत्मा उनीहरूलाई धिक्कार्दछ, परन्तु आख़िरत (परलोक) मा त सबैको आत्माले धिक्कार्नेछ ।

[३] यो शपथको उत्तर हो । मानिससित अभिप्राय यहाँ काफ़िर तथा नास्तिक मानिस हो जो क़यामत (प्रलय) लाई मान्दैन, त्यसको सोंच गलत छ । अल्लाह तआला निश्चय मानिसहरूका अंश (अंग) लाई एकत्रित गर्नेछ । यहाँ हड्डीहरूको विशेष रुपले चर्चा छ यसकारण कि हड्डीहरू नै पैदाईशको मूल ढाँचा तथा गोलाम्बर (फर्मा) हुन् ।

[४] بَنَان हात एवं खुट्टाका ती किनारालाई भन्दछन् जो जोर्नी, नङ्ग्रा तथा सूक्ष्म धमनीहरू एवं मसिना हड्डीहरूमा स्थित हुन्छन् । जब यी मसिना तथा सूक्ष्म वस्तुहरूलाई हामीले जोड्दिनेछौं भने ठूला-ठूला भागहरू (अङ्गहरू) लाई जोड दिनु हाम्रा लागि के कठिन हुनेछ ?

[५] अर्थात् यस आशामा सत्यको अवहेलना तथा इन्कार गर्दछ कि कुनचाहिं प्रलय आउनुछ ।

يَسْـَٔلُ أَيَّانَ يَوْمُ ٱلْقِيَٰمَةِ ۝٦

(६) सोध्छ कि क़ेयामत (प्रलय) को दिन कहिले आउनेछ ?[1]

فَإِذَا بَرِقَ ٱلْبَصَرُ ۝٧

(७) त जुनबेला आँखाहरू दृष्टिविहीन हुनेछन् ।[2]

وَخَسَفَ ٱلْقَمَرُ ۝٨

(८) तथा चन्द्रमा प्रकाशहीन हुनेछ ।[3]

وَجُمِعَ ٱلشَّمْسُ وَٱلْقَمَرُ ۝٩

(९) तथा सूर्य एवं चन्द्रमा एकत्र हुनेछन् ।[4]

يَقُولُ ٱلْإِنسَٰنُ يَوْمَئِذٍ أَيْنَ ٱلْمَفَرُّ ۝١٠

(१०) त्यसदिन मानिसले भन्नेछ कि आज भाग्नुको स्थान कहाँ छ ?[5]

كَلَّا لَا وَزَرَ ۝١١

(११) होइन-होइन कुनै शरणस्थल छैन ।[6]

إِلَىٰ رَبِّكَ يَوْمَئِذٍ ٱلْمُسْتَقَرُّ ۝١٢

(१२) आज त तिम्रो प्रभुतिर नै ठिकाना छ ।[7]

[1]यो प्रश्न यसकारण गर्दैन कि पापहरूबाट क्षमा माँगोस्, अपितु क़ेयामत घटित हुने कुरोलाई असम्भव ठान्दै प्रश्न गर्दछ । यसकारण अवज्ञा तथा दूराचारले रोकिन्न तैपनि आगामी अवधिमा अल्लाह तआला क़ेयामत आउनुको समय भनिराखेको छ ।

[2]भय तथा आश्चर्यले जस्तो मृत्युका समय साधारणतः हुन्छ ।

[3]जब चन्द्रमालाई ग्रहण लाग्दछ त त्यस समय पनि त्यो प्रकाशहीन हुनजान्छ । किन्तु यो चन्द्रग्रहण जो प्रलयका लक्षणहरूमध्ये छ जब हुनेछ त तत्पश्चात त्यसमा प्रकाश आउने छैन ।

[4]अर्थात् प्रकाशहीन हुनुबाट अभिप्राय हो कि चन्द्रमाका समान सूर्यको पनि प्रकाश समाप्त हुनेछ ।

[5]अर्थात् जब यी घटनाहरू घट्नेछन् त अल्लाहबाट अथवा नरकको यातनाबाट भाग्नुको मार्ग खोज्नेछ, किन्तु त्यस समय भाग्नुको बाटो कहाँ हुनेछ ।

[6]وَزَر पर्वत अथवा गढलाई भन्दछन् जहाँ मनुष्यले शरण लेओस् त्यहाँ यस्तो कुनै शरणको ठाउँ हुनेछैन ।

[7]जहाँ त्यसले भक्तहरूका बीच निर्णय गर्नेछ । यो सम्भव हुनेछैन कि कोही अल्लाहका यस न्यायलयबाट लुक्न सकोस् ।

يُنَبَّؤُا الْإِنسَانُ يَوْمَئِذٍ بِمَا قَدَّمَ وَأَخَّرَ ﴿١٣﴾

(१३) आज मनुष्यलाई त्यसबाट अगाडि पठाइएका तथा पछाडि छाडिएकोसित अवगत गराइनेछ ।[1]

بَلِ الْإِنسَانُ عَلَىٰ نَفْسِهِ بَصِيرَةٌ ﴿١٤﴾

(१४) बरु मनुष्य स्वयं आफूमाथि प्रमाण छ ।[2]

وَلَوْ أَلْقَىٰ مَعَاذِيرَهُ ﴿١٥﴾

(१५) यद्यपि जति नै बहानाहरू पेश गरोस् ।[3]

لَا تُحَرِّكْ بِهِ لِسَانَكَ لِتَعْجَلَ بِهِ ﴿١٦﴾

(१६) (हे नबी !) (तपाईं) कुरआनलाई छिटो याद गर्नका लागि आफ्नो जिब्रोलाई नहल्लाउनुस् ।

إِنَّ عَلَيْنَا جَمْعَهُ وَقُرْآنَهُ ﴿١٧﴾

(१७) त्यसलाई एकत्रित गर्नु तथा (तपाईंका मुखबाट) पढांउनु हाम्रो दायित्व हो ।[4]

فَإِذَا قَرَأْنَاهُ فَاتَّبِعْ قُرْآنَهُ ﴿١٨﴾

(१८) हामीले जब त्यसलाई पढिहाल्छौं,[5] त तपाईंले त्यसका

[1]अर्थात् जसलाई त्यसका सबै कमहरूसित अवगत गराइनेछ, नयाँ होस् अथवा पुरानो, प्रथम होस् अथवा अन्तिम, सानो होस् अथवा महान् । ﴿وَوَجَدُوا مَا عَمِلُوا حَاضِرًا﴾ (अल-कहफ़-४९)

[2]अर्थात् त्यसका आफ्ना हात, खुट्टा, जिब्रो तथा अन्य अङ्गले गवाही दिनेछन् अथवा यो अर्थ हो कि मानिस आफ्ना दोष स्वयं जान्दछ ।

[3]अथवा लडोस्, झगडोस् एउटा न एउटा बहाना गरोस्, किन्तु यस्तो गर्नु न त्यसका लागि लाभप्रद छ तथा न त्यो आफ्ना अन्त: करणलाई शान्त गर्नसक्छ ।

[4]आदरणीय जिब्रील जब वह्य (प्रकाशना) लिएर आउनुहुन्थ्यो त नबी सल्लल्लाहु अलैहि व सल्लम पनि उनका साथ शीघ्रताले पढ्दै जानुहुन्थ्यो कि कुनै शब्द नबिर्सियून् । अल्लाहले उहाँलाई फरिश्ताका साथ-साथ यसप्रकार पढ्नुबाट रोकिदियो । (सहीह बुख़ारी, तफ़सीर सूरतिल क़ियाम:) यो विषय पहिले पनि गुज्रिसकेको छ । ﴿وَلَا تَعْجَلْ بِالْقُرْآنِ مِن قَبْلِ أَن يُقْضَىٰ إِلَيْكَ وَحْيُهُ﴾ (सूर: ताहा-११४) अत: यस आदेशका पश्चात उहाँ चूप लागेर सुन्नुहुन्थ्यो ।

[5]अर्थात् तपाईंका छातिमा त्यसलाई एकत्रित गरिदिनु तथा तपाईंको जिब्रोमा जारी गरिदिनु हाम्रो दायित्व हो, ताकि उसको कुनै भाग तपाईंका स्मरणबाट ननिस्कोस् तथा तपाईंलाई नबिर्सोस् ।

[6]अर्थात् फरिश्ता (जिब्रील) द्वारा जब हामी त्यसको पाठ तपाईंका लागि पूरा गरिहाल्छौं ।

पढ्नुको अनुकरण गर्नुस् ।[1]

ثُمَّ إِنَّ عَلَيْنَا بَيَانَهُۥ ﴿١٩﴾

(१९) अनि त्यसलाई स्पष्ट गरिदिनु हाम्रो दायित्व हो ।[2]

كَلَّا بَلْ تُحِبُّونَ ٱلْعَاجِلَةَ ﴿٢٠﴾

(२०) होइन-होइन तिमी त शीघ्र प्राप्त हुने (संसार) सित प्रेम गर्दछौ ।

وَتَذَرُونَ ٱلْـَٔاخِرَةَ ﴿٢١﴾

(२१) तथा परलोकलाई छाडिहालेका छौ ।[3]

وُجُوهٌ يَوْمَئِذٍ نَّاضِرَةٌ ﴿٢٢﴾

(२२) त्यसदिन धेरै मुख प्रफुल्लित (एवं प्रकाशित) हुनेछन् ।

إِلَىٰ رَبِّهَا نَاظِرَةٌ ﴿٢٣﴾

(२३) आफ्ना प्रभुतिर देखिराखेका हुनेछन् ।[4]

وَوُجُوهٌ يَوْمَئِذٍۭ بَاسِرَةٌ ﴿٢٤﴾

(२४) तथा कति मुख त्यस दिन (कुरुप एवं) उदास हुनेछन् ।[5]

---

[1]अर्थात् त्यसका आदेश तथा धर्म-विधान मानिसहरूलाई पढेर सुनाउनुस् तथा तिनको पालना पनि गर्नुस् ।

[2]अर्थात् त्यसका जटिल स्थानहरूको व्याख्या तथा हलाल (वैध) एवं हराम (निषेध) को स्पष्टीकरण हाम्रो दायित्व हो । यसको स्पष्ट अर्थ यो हो कि नबी सल्लल्लाहु अलैहि व सल्लमले कुरआनका संक्षेपहरूको जो वर्णन, मुब्हमहरू (गुणहरू) को व्याख्या तथा त्यसको साधारण विषयहरूको जुन विशेषता भन्नुभएको छ, जसलाई हदीस भनिन्छ, यो पनि अल्लाहको तर्फबाट दिव्यवाणी तथा सुझाव दिएका कुराहरू हुन् यसकारण उनलाई पनि कुरआन जस्तै मान्नु आवश्यक छ ।

[3]अर्थात् प्रलयका दिनलाई झुठ्लाउनु, ما أنزل الله को विरोध तथा सत्यबाट विमुखता यसकारण छ कि तिमीले सांसारिक जीवनलाई नै सबैथोक ठानेका छौ तथा आखिरत तिमीले बिर्सेका छौ ।

[4]यी ईमान भएकाहरूका अनुहार हुनेछन् जो आफ्नो शुभ परिणामका कारण शान्त, प्रसन्न तथा प्रकाशित हुनेछन । अनि अल्लाहका दर्शनसित पनि आनन्दित हुनेछन् जस्तो कि सहीह हदीसहरूबाट स्पष्ट छ तथा अहले सुन्नतको सर्वमान्य विश्वास हो ।

[5]यी काफ़िरहरूका अनुहार हुनेछन् । باسرة परिवर्तित भएका, पहेंला, शोक तथा चिन्ताले काला एवं कुरुप हुनेछन् ।

تَظُنُّ أَنْ يُفْعَلَ بِهَا فَاقِرَةٌ ﴿٢٥﴾

(२५) बुझेका हुनेछन् कि उनका साथ कम्मर भाँचिदिने व्यवहार गरिनेछ ।[1]

كَلَّا إِذَا بَلَغَتِ التَّرَاقِيَ ﴿٢٦﴾

(२६) होइन-होइन[2] जब प्राण कण्ठसम्म आइपुग्ने छन् ।[3]

وَقِيلَ مَنْ ۜ رَاقٍ ﴿٢٧﴾

(२७) तथा भनिनेछ कि कोही धामी-झाक्री (झार फूक गर्नेवाला) छ ।[4]

وَظَنَّ أَنَّهُ الْفِرَاقُ ﴿٢٨﴾

(२८) तथा उसले विश्वास गरिहाल्यो कि यो बिदाको समय हो ।[5]

وَالْتَفَّتِ السَّاقُ بِالسَّاقِ ﴿٢٩﴾

(२९) तथा पिडौंलासित पिंडौला जोडिने छ ।[6]

إِلَىٰ رَبِّكَ يَوْمَئِذٍ الْمَسَاقُ ﴿٣٠﴾

(३०) आज तिम्रा प्रभूतिर हिंडनु छ ।

فَلَا صَدَّقَ وَلَا صَلَّىٰ ﴿٣١﴾

(३१) त उसले न त पुष्टि गऱ्यो न नमाज़ पढ्यो ।[7]

---

[1]तथा त्यो यही कि नरकमा उनलाई फ्याँकिदिइनेछ ।

[2]अर्थात् यो सम्भव छैन कि काफ़िर प्रलयमा ईमान स्वीकार गरुन् ।

[3]تراقي यो تَرْقُوَةٌ को बहुवचन हो, यो गर्दनका निकट छाति तथा काँधका बीच एउटा हड्डी हो अर्थात् जब मृतको पंजाले तिमीलाई आफ्नो जकडमा लिनेछ ।

[4]अर्थात् उपस्थित मानिसहरूमध्ये कोही छ जो झार-फूँकद्वारा तिमीलाई मृत्युको पंजाबाट मुक्त गर्न सकोस् । केहीले यसको अर्थ यो पनि गरेका छन् कि त्यसको आत्मा (प्राण) लिएर को उक्लियोस् ? दयाका फरिश्ता अथवा यातनाका ? यस स्थितिमा यो वचन फरिश्ताहरूको हो ।

[5]अर्थात् त्यस व्यक्तिले विश्वास गर्नेछ जसका प्राण कण्ठसम्म पुगेका छन् कि अब धन, सन्तान तथा संसारको प्रत्येक वस्तुबाट बिदाईको समय आइपुग्यो ।

[6]यसबाट यो त मृत्युको पिंडुलाको पिडुलासित जोड्नु तात्पर्य हो अथवा निरन्तर दुख सामान्य भाष्यकारहरूले दोस्रा अर्थ लिएका छन् । (फ़तुहुल क़दीर)

[7]अर्थात् यस मनुष्यले न अल्लाह तथा रसूल एवं कुरआनलाई मान्यो न नमाज़ पढ्यो अर्थात् अल्लाहको इबादत गरेन ।

| | |
|---|---|
| (३२) अपितु झुठ्लायो तथा फर्किहाल्यो ।[1] | وَلَٰكِن كَذَّبَ وَتَوَلَّىٰ ﴿٣٢﴾ |
| (३३) अनि आफ्ना घरवालाहरूसित घमण्ड गर्दै गयो ।[2] | ثُمَّ ذَهَبَ إِلَىٰٓ أَهْلِهِۦ يَتَمَطَّىٰٓ ﴿٣٣﴾ |
| (३४) अफसोच छ तिमीमाथि, पछुतो छ तिमीमाथि । | أَوْلَىٰ لَكَ فَأَوْلَىٰ ﴿٣٤﴾ |
| (३५) अनि दु:ख छ तथा खराबी छ तिम्रा लागि ।[3] | ثُمَّ أَوْلَىٰ لَكَ فَأَوْلَىٰٓ ﴿٣٥﴾ |
| (३६) के मनुष्य यो ठान्दछ कि त्यसलाई व्यर्थ छाडिदिइनेछ ।[4] | أَيَحْسَبُ ٱلْإِنسَٰنُ أَن يُتْرَكَ سُدًى ﴿٣٦﴾ |
| (३७) के त्यो एउटा बाक्लो पानीको थोपा थिएन, जो चुहाइन्छ ? | أَلَمْ يَكُ نُطْفَةً مِّن مَّنِىٍّ يُمْنَىٰ ﴿٣٧﴾ |
| (३८) के त्यो रगतको डल्लो भयो, अनि (अल्लाहले) त्यसलाई पैदा गऱ्यो तथा ठीक रुपमा बनाइदियो ।[5] | ثُمَّ كَانَ عَلَقَةً فَخَلَقَ فَسَوَّىٰ ﴿٣٨﴾ |
| (३९) अनि त्यसबाट युगल अर्थात् भाले-पोथी बनायो । | فَجَعَلَ مِنْهُ ٱلزَّوْجَيْنِ ٱلذَّكَرَ وَٱلْأُنثَىٰٓ ﴿٣٩﴾ |
| (४०) के (अल्लाह तआला) यस (कुरा) माथि समर्थ छैन कि मृतलाई जीवित गरिदेओस् ?[6] | أَلَيْسَ ذَٰلِكَ بِقَٰدِرٍ عَلَىٰٓ أَن يُحْـِۧىَ ٱلْمَوْتَىٰ ﴿٤٠﴾ |

[1] अर्थात् रसूललाई झुठ्लाए तथा ईमान एवं आज्ञापालन गरेन ।

[2] يَتَمَطَّىٰ घमण्ड तथा अट्टेरीपना गर्दै)

[3] यो धम्कीको शब्द हो । भनिन्छ कि यो वास्तवमा أولاك الله ما تكرهه हो, "अल्लाहले तिमीलाई यस्तो कुरामा ग्रस्त गरिदेओस् जसलाई तिमी मान्दछौ ।"

[4] अर्थात् उसलाई कुनै कुराको आदेश दिइनेछ न कसैबाट रोकिनेछ, न उसको हिसाब लिइनेछ, न दण्ड । अथवा उसलाई सदाका लागि कब्रमा छाडिदिइनेछ तथा त्यसलाई पुन: जीवित गरिनेछैन ।

[5] فَسَوَّىٰ अर्थात् त्यसलाई ठीक-ठाक गऱ्यो तथा त्यसको पूर्ति गऱ्यो तथा त्यसमा आत्मा फुक्यो ।

[6] अर्थात् जो अल्लाह मानिसहरूलाई यसप्रकार अनेक स्थितिहरूबाट गुजारेर पैदा गर्दछ के मर्नुका पश्चात उनीहरूलाई पुन: जीवित गर्नुमा समर्थ छैन ?

سُوْرَةُ الدَّهْرِ

## सूरतुद्दहर-७६

सूर: दहर* मदीनामा अवतरित भएको तथा यसमा ३१ आयतहरू एवं २ रुकूअ छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

هَلْ أَتَىٰ عَلَى الْإِنسَانِ حِينٌ مِّنَ الدَّهْرِ لَمْ يَكُن شَيْئًا مَّذْكُورًا ①

(१) निश्चय नै मनुष्यमाथि युगको एउटा त्यो समय पनि गुज्रिसकेकेको छ[1] जबकि त्यो कुनै वर्णन गर्ने योग्य वस्तु थिएन ।

إِنَّا خَلَقْنَا الْإِنسَانَ مِن نُّطْفَةٍ أَمْشَاجٍ نَّبْتَلِيهِ فَجَعَلْنَاهُ سَمِيعًا بَصِيرًا ②

(२) नि:सन्देह हामीले मनुष्यलाई मिलेजुलेका वीर्यबाट परीक्षाका लागि पैदा गऱ्यौं ।[2] तथा त्यसलाई सुन्ने तथा देख्नेवाला बनायौं ।[3]

*यो मक्की तथा मदनी हुनुमा मतभेद छ । साधारण विद्वान यसलाई मदनी मान्दछन् । केही भन्दछन् कि अन्तिम दस आयत मक्की हुन्, शेष मदनी हुन् । (फ़तहुल क़दीर) रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम जुमअ:का दिन फज्रको नमाज़मा الٓمٓ تَنزِيلُ السَّجْدَة (अलिफ. लाम. मीम तंजीलुस सजदा) तथा सूर: इन्सान (दहर) पढ्ने गर्नुहुन्थ्यो । (सहीह मुस्लिम, किताबुल जुमुअ:, बाबुमा युकरउ फ़ी यौमिल जुमुअते) यस सूर:लाई सूर:इन्सान पनि भनिन्छ ।

[1] هَلْ यहाँ قَدْ का अर्थमा छ जस्तो कि अनुवादले स्पष्ट छ । الإنسان सित केहीका निकट मानव पिता अर्थात् प्रथम मानव आदरणीय आदम अभिप्राय छन् । حِينٌ (एक समय) सित अभिप्राय प्राण फुकिनुभन्दा पूर्वको समय हो जो चालीस वर्ष छ तथा अधिकतर व्याख्याकारहरूका विचारले الإنسان शब्द मानव जातिका लागि प्रयुक्त भएको छ, तथा حِينٌ (समय) सित तात्पर्य गर्भ अर्थात् आमाका गर्भमा रहनुको अवधि हो, जसमा त्यो वर्णनीय वस्तु हुँदैन । यसमा मानौ मानिसलाई सावधान गरिएको छ कि त्यो एउटा सुन्दर रुपमा जब वाहिर आउँछ त प्रभुका अगाडि घमण्ड गर्दछ, तथा अट्टेरीपना गर्दछ । त्यसले आफ्नो हैसीयत याद राख्नुपर्छ कि म त त्यही हूँ, जब म नास्ति संसारमा थिएँ, त मलाई को जान्दथ्यो ?

[2] मिश्रितको अभिप्राय नर-नारी दुबैको वीर्यको संयोग अनि तिनको विभिन्न स्थितिहरूबाट गुज्रनु हो । पैदा गर्नुको उद्देश्य मानिसको परीक्षा हो । ﴿لِيَبْلُوَكُمْ أَيُّكُمْ أَحْسَنُ عَمَلًا﴾ (अल-मुल्क-२)

[3] अर्थात् त्यसलाई सुन्ने तथा देख्ने शक्ति प्रदान गऱ्यौ, ताकि त्यसले सबै कुरा देखोस् तथा सुन्न सकोस् तथा तत्पश्चात आज्ञापालन अथवा अवज्ञाको मार्ग रोज्न सकोस् ।

إِنَّا هَدَيْنَٰهُ ٱلسَّبِيلَ إِمَّا شَاكِرًا وَإِمَّا كَفُورًا ③

(३) हामीले त्यसलाई मार्ग देखायौं, अब चाहे त्यो कृतज्ञ बनोस् अथवा कृतघ्ना ।[1]

إِنَّآ أَعْتَدْنَا لِلْكَٰفِرِينَ سَلَٰسِلَا۟ وَأَغْلَٰلًا وَسَعِيرًا ④

(४) निःसन्देह हामीले काफ़िरहरूका लागि जंजीरहरू तथा तौक एवं प्रज्वलित अग्नि तयार गरेका छौं ।[2]

إِنَّ ٱلْأَبْرَارَ يَشْرَبُونَ مِن كَأْسٍ كَانَ مِزَاجُهَا كَافُورًا ⑤

(५) निःसन्देह सदाचारीहरूले त्यस प्यालाबाट पिउनेछन् जसमा काफूर (कपुर) को मिश्रण छ ।[3]

عَيْنًا يَشْرَبُ بِهَا عِبَادُ ٱللَّهِ يُفَجِّرُونَهَا تَفْجِيرًا ⑥

(६) जो एक स्रोत हो ।[4] जसबाट अल्लाहका भक्तहरूले पिउनेछन्, त्यसका नहरहरू निकाल्नेछन् (जता चाहनेछन्) ।[5]

---

[1]अर्थात् उपरोक्त शक्ति तथा योग्यताहरूका अतिरिक्त हामीले स्वयं पनि अम्बिया अलैहिस्सलाम, आफ्ना किताबहरू तथा सत्यका प्रचारकहरूद्वारा सत्यका मार्गलाई स्पष्ट गरिदिएका छौं । अब यो त्यसको रुचि हो कि अल्लाहको आज्ञाको पालना गरेर कृतज्ञ भक्त बनोस् अथवा अवज्ञाको मार्ग अपनाएर कृतघ्न बनोस् । जस्तो एउटा हदीसमा नबी सल्लल्लाहु अलैहि व सल्लमसले भन्नुभयो «كُلُّ النَّاسِ يَغْدُو فَبَائِعٌ نَفْسَهُ، فَمُوبِقُهَا، أَوْ مُعْتِقُهَا» "प्रत्येक प्राणी आफ्ना प्राणको क्रय-विक्रय गर्दछ त त्यसलाई नाश गरिदिन्छ अथवा त्यसलाई मुक्त गराउँछ ।" (सहीह मुस्लिम, किताबुत तहारत, बाबु फ़जलिल वजूए) अर्थात् आफ्ना कर्म तथा कर्तुतद्वारा नष्ट अथवा मुक्त गराउँछ । यदि पाप कमाउने छ भने आफ्ना प्राणलाई नाश तथा भलाई कमाउनेछ भने प्राणलाई मुक्त गराउनेछ ।

[2]यो अल्लाहद्वारा दिइएको स्वाधीनताका गलत प्रयोगको परिणाम हो ।

[3]हतभागाहरू मुकाबिलामा यो भाग्यशाली मानिसहरूको चर्चा हो । كَأْس (कास) त्यस प्यालालाई भन्दछन् जो भरिएको होस् तथा छल्किरहेको होस् । कपूर शीतल तथा एक विशेष सुगन्ध राख्दछ, त्यसलाई मिसाउनाले मदिराको स्वाद दुईगुना तथा सुगन्ध प्राणलाई सुगन्धित गरिदिनेछ ।

[4]अर्थात् यो कपूर मिसिएको मदीरा दुई चार सुराहीहरू अथवा घैंटाहरूमा हुनेछैन, बरु त्यसको एउटा नहर हुनेछ, अर्थात् त्यो समाप्त हुनेछैन ।

[5]अर्थात् त्यसलाई जता चाहनेछन् मोड्नेछन्, आफ्ना महल तथा घरहरूमा आफ्ना सभा तथा बैठकहरूमा तथा बाहिर मैदान एवं मनोरञ्जन स्थलहरूमा हुन् ।

يُوفُونَ بِالنَّذْرِ وَيَخَافُونَ يَوْمًا كَانَ شَرُّهُ مُسْتَطِيرًا ⑦

(७) जो मन्नत पुरा गर्दछन्[1] तथा त्यसदिनसित तर्सन्छन् जसको अवगुण चारैतिर फैलनेवाली छ ।[2]

وَيُطْعِمُونَ الطَّعَامَ عَلَىٰ حُبِّهِ مِسْكِينًا وَيَتِيمًا وَأَسِيرًا ⑧

(८) तथा अल्लाह (तआला) का प्रेममा भोजन गराउँछन् निर्धन अनाथ एवं कैदीहरूलाई ।

إِنَّمَا نُطْعِمُكُمْ لِوَجْهِ اللَّهِ لَا نُرِيدُ مِنكُمْ جَزَاءً وَلَا شُكُورًا ⑨

(९) हामीले त तिमीलाई केवल अल्लाह (तआला) को प्रसन्नताका लागि[3] खुवाउछौं, तिमीसित न बदला (साटो) चाहन्छौं न कृतज्ञता ।

إِنَّا نَخَافُ مِن رَّبِّنَا يَوْمًا عَبُوسًا قَمْطَرِيرًا ⑩

(१०) नि:सन्देह हामी आफ्ना प्रभुसित त्यस दिनको भय राख्दछौं[4] जो अभाव एवं कठोर तावाला हुनेछ ।

[1]अर्थात् मात्र एक अल्लाहको उपासना गर्दछौं । मनौति पनि माँग्छौं भने मात्र अल्लाहका लागि तथा त्यसपछि त्यसलाई पूरा गर्दछौं । यसबाट ज्ञात भयो कि मनौती पूरा गर्नु पनि आवश्यक छ, प्रतिबन्ध यो हो कि अवज्ञाको नहोस् । जस्तो कि हदीसमा वर्णित छ कि जसले मन्नत माँगेको छ कि त्यसले अल्लाहको आज्ञापालन गर्नेछ त त्यसको पालना गरोस् तथा जसले अल्लाहको अवज्ञाको मन्नत माँगेको (प्रतिज्ञा गरेको) छ भने त्यसले अल्लाहको अवज्ञा नगरोस् अर्थात् त्यसलाई पूरा नगरोस् । (सहीह बुख़ारी किताबुल ऐमान बाबुन नज़्रे फित ताअते)

[2]अर्थात् त्यस दिनसित तर्सदै अवज्ञा तथा निषेध काम गर्दैनन् । नराम्रो (पाप) फैलिजानुको अभिप्राय यो हो कि त्यस दिन अल्लाहको पकडबाट केवल त्यही बच्नेछ जसलाई अल्लाहले क्षमा गर्नेछ । शेष सबै त्यसको अनिष्टको लपेटमा हुनेछन् ।

[3]अथवा भोजनका प्रेमका उपरान्त, उनी अल्लाहका प्रसन्नताका लागि गरीबहरूलाई खाना खुवाउँछन् । बन्दी (कैदी) यदि मुसलमान छैन भने पनि त्यसका साथ सद्व्यवहारमा बल दिइएको छ । बद्रका काफ़िर कैदीहरूका विषयमा नबी सल्लल्लाहु अलैहि व सल्लम सहाबालाई आदेश दिनुभयो कि उनको आदर गर, सहाबा पहिला उनीहरूलाई खुवाउँथे अनि स्वयं खान्थे । (इब्ने कसीर) यसैप्रकार दास तथा नोकर-चाकर पनि यसैका अधीन आउँछन् जसका साथ सदव्यवहारमा बल दिइएको छ । उहाँको अन्तिम वसीयत (उपदेश) यही थियो कि नमाज़ तथा आफ्ना दासहरूको ध्यान राख्नु । (इब्ने माजा, किताबुल वसाया बाबु हल, औसा रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लम)

[4]आदरणीय इब्ने अब्बास रज़ीयल्लाहु अन्हुले قَمْطَرِير को अर्थ दीर्घ गर्नुभएको छ । عَبُوس कडा, अर्थात् त्यो दिन अत्यन्त कठिन हुनेछ तथा कडाईका कारण काफ़िरहरूका लागि निकै लामो हुनेछ । (इब्ने कसीर)

فَوَقٰىهُمُ اللّٰهُ شَرَّ ذٰلِكَ الْيَوْمِ وَلَقّٰىهُمْ نَضْرَةً وَّسُرُوْرًا ﴿١١﴾

(११) त उनीहरूलाई अल्लाह तआलाले त्यस दिनको अनिष्टबाट बचाइहाल्यो[1] तथा ताज़गी एवं प्रसन्नता पुऱ्यायो ।[2]

وَجَزٰىهُمْ بِمَا صَبَرُوْا جَنَّةً وَّحَرِيْرًا ﴿١٢﴾

(१२) तथा उनलाई उनका धैर्यका पुरस्कार[3] स्वर्ग एवं रेशमी वस्त्र प्रदान गऱ्यो ।

مُّتَّكِـِٕيْنَ فِيْهَا عَلَى الْاَرَآئِكِ لَا يَرَوْنَ فِيْهَا شَمْسًا وَّلَا زَمْهَرِيْرًا ﴿١٣﴾

(१३) यिनी त्यहाँ तख्ताहरू (आसनहरू) मा तकिया लगाएर बसेका हुनेछन्, न त्यहाँ सूर्यको गर्मी देख्नेछन् न जाडोको कठोरता ।[4]

وَدَانِيَةً عَلَيْهِمْ ظِلٰلُهَا وَذُلِّلَتْ قُطُوْفُهَا تَذْلِيْلًا ﴿١٤﴾

(१४) तथा ती (स्वर्ग) का छायाँहरू उनीमाथि झुकेका हुनेछन्[5] तथा उनका (फलहरू) एवं गुच्छाहरू तल झुण्ड्याइएका हुनेछन् ।[6]

وَيُطَافُ عَلَيْهِمْ بِاٰنِيَةٍ مِّنْ فِضَّةٍ

(१५) तथा उनका लागि चाँदीका बर्तन (भाडाहरू) एवं ती

---

[1]जस्तो कि उनी त्यसको अनिष्टतासित तर्सन्थे तथा त्यसबाट बच्नका लागि अल्लाहको आज्ञाको पालन गर्दथे ।

[2]ताज़गी अनुहारहरूमा हुनेछ तथा प्रसन्नता हृदयहरूमा । जब मनुष्यको हृदय प्रसन्न हुन्छ त त्यसको अनुहार पनि प्रसन्नताले प्रफुल्ल हुन्छ । नबी सल्लल्लाहु अलैहि व सल्लमका विषयमा वर्णन छ कि जब उहाँ सल्लल्लाहु अलैहि व सल्लम प्रसन्न हुनुहुन्थ्यो त उहाँको अनुहार यस्तो प्रकाशमान हुन्थ्यो मानौं चन्द्रमाको टुक्रा हो । (अल बुख़ारी किताबुल मगाज़ी, बाबु ग़ज्वते तबूक र मुस्लिम किताबुत तौबा, बाबु हदीसे तौबते काब इब्ने मालिक)

[3]धैर्यको अर्थ हो धर्मका मार्गमा जुन कष्ट आउँछन् तिनलाई प्रसन्नतापूर्वक सहन गर्नु अल्लाहका मार्गमा मनोकांक्षा तथा स्वार्थहरूको त्याग तथा अवज्ञाबाट बच्नु ।

[4]زَمْهَرِيْر कडा जाडोलाई भन्छन् । अभिप्राय यो हो कि त्यहाँ सधैं एउटै ऋतु रहनेछ, तथा त्यो हो बसन्त ऋतु, न अति गर्मी तथा न कडा शीत ।

[5]यद्यपि त्यहाँ सूर्यको ताप हुनेछैन, त्यसका उपरान्त पनि वक्षहरूका छायाँ उनीमाथि झुकेका हुनेछन् । अथवा अभिप्राय यो हो कि उनका शाखाहरू उनका निकट हुनेछन् ।

[6]अर्थात् वृक्षहरूका फल एउटा आज्ञाकारीका समान जब खानुको इच्छा हुनेछ त झुकेर यति निकट हुनेछन् कि बसेको, पल्टेको अवस्थामा पनि तिनलाई टिप्न सकून् । (इब्ने कसीर)

وَّ أَكْوَابٍ كَانَتْ قَوَارِيرَا ۝

गिलासहरूको दौर चलाइनेछ,[1] जो शिशाका हुनेछन् ।

قَوَارِيرَا مِنْ فِضَّةٍ قَدَّرُوهَا تَقْدِيرًا ۝

(१६) शिशा पनि चाँदीका[2] जसलाई (पिलाउनेहरूले) अनुमानले नापिराखेका हुनेछन् ।

وَيُسْقَوْنَ فِيهَا كَأْسًا كَانَ مِزَاجُهَا زَنْجَبِيلًا ۝

(१७) तथा उनीहरूलाई त्यहाँ ती पेय पदार्थ पिलाउने छन् जसमा सोंठ (सुकेको अदुवा) को मिश्रण हुनेछ ।[4]

عَيْنًا فِيهَا تُسَمَّىٰ سَلْسَبِيلًا ۝

(१८) स्वर्गको एक नहरबाट, जसको नाम सलसबील हो ।[5]

وَيَطُوفُ عَلَيْهِمْ وِلْدَانٌ مُخَلَّدُونَ إِذَا رَأَيْتَهُمْ حَسِبْتَهُمْ لُؤْلُؤًا مَنْثُورًا ۝

(१९) तथा उनका चारैतिर ती कम आयु केटाहरू घुमफिर गरिराखेको हुनेछन् जो सधैं रहनेवाला छन्,[6] जब तिमीले उनीहरूलाई देख्नेछौ त ठान्दछौ कि तिनी छरिएका

[1]अर्थात् नोकर (सेवक) उनीहरूलाई लिएर स्वर्गवासीहरूका बीच घुम्नेछन् ।

[2]अर्थात् यी भाडा तथा प्याला चाँदी एवं शिशाबाट बनेका हुनेछन्, अति सुन्दर तथा सूक्ष्म । मानौं यो यस्तो बनावट हो जसको कुनै तुलना संसारमै छैन ।

[3]अर्थात् तिनीहरूमा मदिरा यस्तो तरीकाले हालिएको हुनेछ कि जसबाट उनी तृप्त हुनेछन्, प्यासको संवेदन नगरुन् तथा प्यालाहरूमा पनि शेष बचेका नरहून् । अतिथि सत्कारका यस तरीकामा पनि अतिथिहरूका आदर-सत्कारकै प्रयोजन छ ।

[4] زَنْجَبِيل (सोंठ, सुकेको अदुवा) लाई भन्दछन् । यो गरम हुन्छ, यसका मिश्रणबाट एउटा स्वादिष्ट कडुवापन आउँछ । यसका अतिरिक्त यो अरबहरूको रुचिकर कुरो हो । यसकारण क़हवामा पनि अदरकको मिश्रण हुन्छ । अभिप्राय यो हो कि स्वर्गमा एउटा मदिरा त्यो हुनेछ जो शीतल हुनेछ जसमा कपूर मिलेको हुनेछ तथा दोस्रो गरम जसमा सुखेको अदरकको मिश्रण हुनेछ ।

[5]अर्थात् सोंठीको यस शराबको पनि नहर हुनेछ जसलाई सलसबील भनिन्छ ।

[6]मदिराका गुणहरूलाई वर्णन गर्नुका पश्चात पिलाउनेहरूका गुण बताईदैछन् । "सधैं रहनेछन्" को एउटा अर्थ त यो हो कि स्वर्गवासीहरूका समान ती सेवकहरूलाई पनि मृत्यु आउने छैन । दोस्रो यो कि उनको बाल आयु तथा सुन्दरता सधैं रहनेछ, न उनी बूढा हुनेछन् न उनको शोभा एवं सौन्दर्यमा कुनै परिवर्तन हुनेछ ।

(सच्चा) मोति हुन् ।[1]

وَإِذَا رَأَيْتَ ثَمَّ رَأَيْتَ نَعِيمًا وَمُلْكًا كَبِيرًا ﴿٢٠﴾

(२०) तथा तिमी त्यहाँ जतातिर पनि दृष्टि पार्नेछौ पूर्ण उपहार तथा महान राज्य नै देख्नेछौ ।[2]

عَالِيَهُمْ ثِيَابُ سُندُسٍ خُضْرٌ وَإِسْتَبْرَقٌ ۖ وَحُلُّوا أَسَاوِرَ مِن فِضَّةٍ وَسَقَاهُمْ رَبُّهُمْ شَرَابًا طَهُورًا ﴿٢١﴾

(२१) उनका (शरीर) मा हरिया मसिना तथा मोटा रेशमी वस्त्र हुनेछन्[3] तथा उनीहरूलाई चाँदीका कङ्गनको आभूषण पहिराइनेछ[4] तथा उनलाई उनका प्रभुले शुद्ध एवं पवित्र शराब पिलाउनेछ ।

إِنَّ هَٰذَا كَانَ لَكُمْ جَزَاءً وَكَانَ سَعْيُكُم مَّشْكُورًا ﴿٢٢﴾

(२२) (भनिनेछ) कि यो हो तिम्रा कर्महरूको प्रतिफल तथा तिम्रा प्रयत्नहरूको प्रशंसा गरिएको ।

إِنَّا نَحْنُ نَزَّلْنَا عَلَيْكَ الْقُرْآنَ تَنزِيلًا ﴿٢٣﴾

(२३) निःसन्देह हामीले तिमीमाथि क्रमशः कुरआन अवतरित गरेका छौं ।[5]

فَاصْبِرْ لِحُكْمِ رَبِّكَ وَلَا تُطِعْ مِنْهُمْ آثِمًا أَوْ كَفُورًا ﴿٢٤﴾

(२४) तर तिमी आफ्ना प्रभुका आदेशमाथि अटल रह[6] तथा उनीहरूमध्ये कुनै पापी अथवा कृतघ्नको

---

[1] सुन्दरता स्वच्छता तथा ताज़गीमा उनी मोतिहरूका समान हुनेछन्, छरिएको अर्थ हो सेवाका लागि सबैतिर फैलिएका तथा अति तेजीका साथ सेवामा लीन हुनेछन् ।

[2] ثَمَّ ठाउँका अर्थमा छ وَ إذا رَأيتَ ثَمَّ، اى: هُنَـاكَ अर्थात् त्यहाँ स्वर्गमा जहाँ कहीं पनि देख्नेछौ ।

[3] سُنْدُس (सुन्दुस) मसिनो रेशमी वस्त्र तथा إِسْتَبْرَق (इस्तब्रक) मोटो रेशम ।

[4] जस्तो एउटा युगमा राजा, प्रमुख तथा वैभवशाली मानिस पहिरने गर्दथे ।

[5] अर्थात् एकैपटक नउतारिकन आवश्यकता अनुसार विभिन्न समयमा उतार्यौं । यसको दोस्रो अभिप्राय यो पनि हुनसक्छ कि यो कुरआन हामीले उतारेका छौं, यो तिम्रो आफूले रचिएको होइन, जस्तो कि मुश्रिकीन दावा गर्दछन् ।

[6] अर्थात् त्यसका निर्णयको प्रतीक्षा गर । त्यो तिम्रो सहायतामा अबेर गरिराखेको छ त त्यसमा त्यसको हिकमत छ । अतः धैर्य तथा साहसको आवश्यकता छ ।

भनाई नमान ।[1]

وَاذْكُرِ اسْمَ رَبِّكَ بُكْرَةً وَّأَصِيلًا ﴿٢٥﴾

(२५) तथा आफ्ना प्रभुका नामको प्रातः एवं सांयम (काल) जप गर्नेगर ।[2]

وَمِنَ الَّيْلِ فَاسْجُدْ لَهُ وَسَبِّحْهُ لَيْلًا طَوِيلًا ﴿٢٦﴾

(२६) तथा रात्रिका समय त्यसका समक्ष सजदा गर तथा धेरै रातिसम्म त्यसको महिमागान गर्नेगर ।[3]

إِنَّ هَٰؤُلَاءِ يُحِبُّونَ الْعَاجِلَةَ وَيَذَرُونَ وَرَاءَهُمْ يَوْمًا ثَقِيلًا ﴿٢٧﴾

(२७) निःसन्देह यी मानिस शीघ्र प्राप्त हुने (संसार) लाई चाहन्छन्[4] तथा आफ्ना पछाडि एउटा निकै ठूलो दिनलाई छाडिदिन्छन् ।[5]



[1]अर्थात् यदि यो तिमीलाई अल्लाहबाट अवतरित गरिएका आदेशहरूबाट रोक्छन् भने उनको भनाई नमान्नु, बरु धर्मप्रचार तथा शिक्षा-दीक्षाको काम जारी राख तथा अल्लाहमाथि भरोसा राख । त्यसले मानिसहरूबाट तिम्रो रक्षा गर्नेछ । آثم (पापी) जो कर्ममा अल्लाहका अवज्ञाकारी हुन्छन् كفور (कफूर) जो हृदयबाट कुफ्र (इन्कार) गर्दछ अथवा कुफ्रमा सीमा उल्लंघन गरिसकेको हुन्छ केही भन्दछन् कि यसबाट अभिप्राय वलीद बिन मुगिरा हो, जसले नबी सल्लल्लाहु अलैहि व सल्लमसित भनेको थियो कि यस कामलाई त्याग्यौ भने, हामी तिमीलाई तिम्रा कथनका अनुसार धन दिनेछौं तथा अरबको जुन सुन्दरीसित तिमी विवाह गर्न चाहन्छौ हामी तिम्रा विवाह गराइदिन्छौं । (फ़तहुल क़दीर)

[2]प्रातः एवं सन्ध्यासित अभिप्राय छ, हर समयमा अल्लाहको स्मरण गर । अथवा प्रातःसित अभिप्राय फज्रको नमाज़ तथा सन्ध्यासित अस्रको नमाज़ हुन् ।

[3]"रातमा सजदा गर" सित अभिप्राय केही विदहरूले मग़रिब तथा इशाका नमाज लिएका छन् तथा تسبيح (तस्बीह) को अर्थ हो कि जो कुरा अल्लाहका योग्य छैनन् तिनीबाट त्यसको पवित्रताको वर्णन गर । केहीले यसबाट रातिको ऐच्छिक नमाज तहज्जुद लिएका छन् । أمر (आदेश) यहाँ भलाई तथा उत्तमका लागि छ ।

[4]अर्थात् यो मक्काका काफ़िर तथा यिनीजस्ता अन्य मानिस सांसारिक माया-मोहमा लीन छन् तथा पूरा ध्यान यसैमाथि छ ।

[5]अर्थात् प्रलयलाई त्यसको गम्भीरता तथा भयानकताका कारण त्यसलाई ठूलो दिन भनियो, तथा त्यस दिनको अर्थ हो कि त्यसको तयारी गर्दैनन् न त्यसको परवाह गर्दछन् ।

نَحْنُ خَلَقْنٰهُمْ وَشَدَدْنَآ اَسْرَهُمْ ۚ وَاِذَا شِئْنَا بَدَّلْنَآ اَمْثَالَهُمْ تَبْدِيْلًا ﴿٢٨﴾

(२८) हामीले उनीहरूलाई पैदा गर्‍यौं तथा हामीले नै उनका जोड (एवं बन्धन) सुदृढ गर्‍यौं । तथा हामी जब चाहन्छौं उनका ठाउँमा उनीजस्तै अरुलाई बदल (साटो) ल्याऊ ।[2]

اِنَّ هٰذِهٖ تَذْكِرَةٌ ۚ فَمَنْ شَآءَ اتَّخَذَ اِلٰى رَبِّهٖ سَبِيْلًا ﴿٢٩﴾

(२९) नि:सन्देह यो त शिक्षा हो, त जो चाहन्छ आफ्नो प्रभुको मार्ग प्राप्त गरोस् ।[3]

وَمَا تَشَآءُوْنَ اِلَّآ اَنْ يَّشَآءَ اللّٰهُ ۭ اِنَّ اللّٰهَ كَانَ عَلِيْمًا حَكِيْمًا ﴿٣٠﴾

(३०) तथा तिमी चाहने छैनौ परन्तु यो कि अल्लाह तआला नै चाहोस् ।[4] नि:सन्देह अल्लाह तआला ज्ञाता एवं हिक्मतवाला छ ।[5]

يُّدْخِلُ مَنْ يَّشَآءُ فِيْ رَحْمَتِهٖ ۭ وَالظّٰلِمِيْنَ اَعَدَّ لَهُمْ عَذَابًا اَلِيْمًا ﴿٣١﴾

(३१) जसलाई चाहन्छ आफ्नो कृपामा सम्मिलित गरोस् तथा पापीहरू (अत्याचारीहरू) का लागि उसले कष्टदायी यातना तयार गरेको छ ।[6]

---

[1]अर्थात् उनको पैदाईशलाई सुदृढ बनायौं । उनका जोडा, रंग तथा तन्तुहरूबाट परस्पर मिलाइदिएका छौं । अर्को शब्दहरूमा उनको माँझ बलियो गर्‍यौं ।

[2]अर्थात् उनको विनाश गरेर उनको ठाउँमा कुनै अन्य समुदायलाई पैदा गरिदियौं अथवा यसको अभिप्राय केयामतका दिन पुन: जीवित हुनुछ ।

[3]अर्थात् यस कुरआनबाट मार्गदर्शन प्राप्त गरोस् ।

[4]अर्थात् तिमीमध्येबाट कोही यस कुरामा समर्थ छैन कि त्यसले स्वयंलाई संमार्गमा लगाओस् आफ्ना लागि कुनै लाभ प्राप्त गरोस् । हो, यदि अल्लाह चाहन्छ भने यस्तो सम्भव छ, त्यसले नचाहिकन तिमीले केही गर्न सक्दैनौ । हो, सही संकल्पमा त्यो प्रतिफल अवश्य प्रदान गर्दछ । «إِنَّمَا الأَعْمَالُ بِالنِّيَّاتِ وَإِنَّمَا لِكُلِّ امْرِئٍ مَا نَوَى» "कर्म इरादाबाट हुन्छन्, प्रत्येक व्यक्तिका लागि त्यो हो जसको त्यसले इरादा गर्दछ ।" (सहीह बुख़ारी, प्रथम हदीस र मुस्लिम)

[5]किनकि त्यो ज्ञाता तथा हिक्मतवाला छ अत: त्यसका प्रत्येक कार्यमा हिक्मत हुन्छ । यसैकारण मार्गदर्शन तथा विचलनका निर्णय पनि यस्तै हचुवा हुँदैन, अपितु जसलाई मार्गदर्शन दिइन्छ, त्यो वास्तवमा त्यसका योग्य हुन्छ तथा यसका भागमा विचलन छ, त्यो वास्तवमा त्यसै योग्य हुन्छ ।

[6]وَالظَّالِمِينَ कर्मकारक यसकारण छ कि यसभन्दा पहिला يُعَذِّبُ लुप्त छ ।

سُوْرَةُ الْمُرْسَلٰتِ

## सूरतुल मुर्सलात-७७

सूरः मुर्सलात* मक्कामा अतवरित भएको यसमा पचास आयतहरू एवं दुई रुकूअ छन्।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ।

وَالْمُرْسَلٰتِ عُرْفًا ﴿١﴾

(१) मनमोहक निरन्तर चल्ने मन्द वायुको सौगन्ध ![1]

فَالْعٰصِفٰتِ عَصْفًا ﴿٢﴾

(२) अनि जोरले जोडसित हुर्रिएर चल्नेको सौगन्ध ![2]

وَّالنّٰشِرٰتِ نَشْرًا ﴿٣﴾

(३) तथा (बादलहरूलाई) उठाएर फैलाउनेहरूको सौगन्ध ![3]

---

*यो सूरः मक्की हो जस्तो कि सहीहैन (बुख़ारी एवं मुस्लिम) मा छ। आदरणीय इब्ने मसऊद भन्नुहुन्छ कि हामी मिनाको एउटा गुफामा थियौं कि उहाँमाथि सूरः मुर्सलात अवतरित भयो। उहाँले त्यसलाई पढिराख्नु भएको थियो तथा मैले त्यसलाई उहाँबाट प्राप्त गरिराखेको थिए कि अकस्मात एउटा नाग आइपुग्यो, उहाँ सल्लल्लाहु अलैहि वसल्लमले भन्नुभयो कि यसलाई मारिदेऊ, किन्तु त्यो तेजीले भागिहाल्यो। उहाँले भन्नुभयो कि तिमी त्यसको अनिष्टबाट तथा त्यो तिम्रो अनिष्टबाट बाँचिहाल्यो। (बुख़ारी, तफ़सीर सूरतिल मुर्सलात, मुस्लिम, किताबु कतलिल हैयाते व ग़ैरेहा) कहिलेकाहीं रसूल्लाह सल्लल्लाहु अलैहि व सल्लमले मग़रिबको नमाज़मा पनि यो सूरः पढ्नु भएछ (बुख़ारी, किताबुल अज़ाने, बाबुल क़िराअते फ़िल मग़रिब, मुस्लिम किताबुस्सलाते बाबुल किराअते फ़िस् सुबहे)

[1]यस भावार्थका आधारमा عرفا को अर्थ निरन्तर हुनेछ। केही विदहरूले مُرسلات सित अभिप्राय अम्बिया अथवा फरिश्ता लिएका छन्। यस स्थितिमा عرفا को अर्थ दैबी प्रकाशना अथवा धर्मविधान हुनेछ।

[2]अथवा फरिश्ताहरू अभिप्राय छन् जो कहिल्यै वायुका प्रकोपका साथ पठाइन्छन्।

[3]अथवा ती फरिश्ताहरूको सौगन्ध, जो बादलहरूलाई फैलाउन्छन् अथवा अन्तरिक्षमा आफ्ना पखेटा फैलाउँछन्। तैपनि इमाम इब्ने क़सीर तथा इमाम तबरीले यी तीनैवटाबाट वायु तात्पर्य लिनलाई अधिमान दिएका छन्, जस्तो कि अनुवादमा पनि यसलाई अपनाइएको छ।

فَالْفٰرِقٰتِ فَرْقًا ۙ﴿٤﴾

(४) अनि सत्य-असत्यलाई अलग-अलग गर्नेहरू ।[१]

فَالْمُلْقِيٰتِ ذِكْرًا ۙ﴿٥﴾

(५) तथा प्रकाशना ल्याउने फरिश्ताहरूको सौगन्ध ![२]

عُذْرًا اَوْ نُذْرًا ۙ﴿٦﴾

(६) जो (प्रकाशना) आक्षेप निवारण अथवा संचेत गरिदिनका लागि हुन्छ ।[३]

اِنَّمَا تُوْعَدُوْنَ لَوَاقِعٌ ۗ﴿٧﴾

(७) निःसन्देह जुन वस्तुको तिमीसित वाचा गरिन्छ, त्यो निश्चित रुपमा हुनेवाली छ ।[४]

فَاِذَا النُّجُوْمُ طُمِسَتْ ۙ﴿٨﴾

(८) त जब ताराहरू प्रकाशहीन गरिदिइनेछन् ।[५]

[१]अर्थात् ती फरिश्ताहरूको सौगन्ध जो सत्य र असत्यका बीच अन्तर गर्ने आदेश लिएर अवतरित हुन्छन्, अथवा अभिप्राय कुरआनका आयतहरू हुन् जसबाट वैध-निषेध, सत्य-असत्यको अन्तर हुन्छ अथवा रसूल अभिप्राय हुन् जो ईश्वरीय प्रकाशनाद्वारा सत्य र असत्यका बीच अन्तर स्पष्ट गर्दछन् ।

[२]जो अल्लाहको वाणी पैग़म्बरहरूलाई पुऱ्याउँछन् अथवा अल्लाहका रसूल तात्पर्य हुन् जो अल्लाहको तर्फबाट अवतरित प्रकाशनालाई मानिसहरूसम्म पुऱ्याउँछन् ।

[३]दुवै कारणवाची कर्म हुन् لأجل الأعذار والإنذار अर्थात् फरिश्ताहरू प्रकाशना लिएर आउँछन् ताकि मानिसहरूका लागि तर्क स्थापित हुन जाओस् तथा यो बहाना न शेष रहोस् कि हाम्रा छेउ त कुनै अल्लाहको सन्देश नै आएन, अथवा उद्देश्य तर्साउनु हो उनलाई जो कुफ्र अथवा इन्कार गर्नेहरू हुनेछन् । अथवा अर्थ हो ईमानवालाहरूका लागि शुभसूचना तथा काफ़िरहरूका लागि चेतावनी । इमाम शौकानी भन्नुहुन्छ कि مُرْسَلات، عاصِفات तथा ناشِرات सित अभिप्राय वायु फارقات एवं مُلْقِيات सित फरिश्ताहरू हुन् । यही कुरा मान्य छ ।

[४]सौगन्धको अभिप्राय जसको सौगन्ध खाइन्छ त्यसको महत्व मानिसहरूका लागि स्पष्ट गर्नु तथा त्यसको सत्यतालाई व्यक्त गर्नुहुन्छ । जसको शपथ लिइदैंछ, त्यो (अथवा सौगन्धको उत्तर) यो हो कि तिमीसित प्रलयको जुन वाचा गरिएको छ, त्यो निश्चय घटित हुनेछ अर्थात् त्यसमा सन्देह गर्नुको होइन बरु त्यसका लागि तयारी गर्नुको आवश्यकता छ, यो प्रलय कहिले घटित हुनेछ ? आगामी आयतहरूमा स्पष्ट गरिदैंछ ।

[५]طُمِسَ को अर्थ भेटिनु तथा बिना चिन्ह हुनु हो । अर्थात् जब ताराहरूको प्रकाश समाप्त बरु तिनका चिन्ह मेटिनेछ ।

وَإِذَا السَّمَاءُ فُرِجَتْ ⑨

(९) तथा जब आकाश क्षत-विक्षत गरिनेछ ।

وَإِذَا الْجِبَالُ نُسِفَتْ ⑩

(१०) तथा जब पर्वत टुक्रा-टुक्रा गरी उडाइनेछ ।[1]

وَإِذَا الرُّسُلُ أُقِّتَتْ ⑪

(११) तथा जब सन्देष्टाहरूलाई निर्धारित समयमा ल्याइनेछ ।[2]

لِأَيِّ يَوْمٍ أُجِّلَتْ ⑫

(१२) कुन दिनका लागि (उनीहरूलाई) रोकिएको छ ?[3]

لِيَوْمِ الْفَصْلِ ⑬

(१३) निर्णयका दिनका लागि ।[4]

وَمَا أَدْرَاكَ مَا يَوْمُ الْفَصْلِ ⑭

(१४) तथा तिमीलाई के ज्ञात छ कि निर्णयको दिन के हो ?

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ⑮

(१५) त्यस दिन झुठ्लाउनेहरूका लागि खराबी छ ।[5]

---

[1]अर्थात् उनीहरूलाई धर्तीबाट उखेलेर कण-कण गरिदिइनेछ तथा धर्ती पूर्णरुपले स्वच्छ तथा समतल हुनेछ ।

[2]अर्थात् निर्णय तथा न्यायका लागि तिनका कुरा सुनेर उनका जातिहरूका बारेमा निर्णय गरिनेछ ।

[3]यो प्रश्न महानता तथा आश्चर्यका लागि छ । अर्थात् कस्ता महान दिनका लागि, जसको कठोरता एवं गम्भीरता मानिसहरूका लागि बडो आश्चर्यजनक हुनेछ । यी पैग़म्बरहरूलाई एकत्र हुनुको समय दिइएको छ ।

[4]अर्थात् जुन दिन मानिसहरूका बीच निर्णय गरिनेछ, कोही स्वर्ग तथा कोही नरकमा जानेछ ।

[5]अर्थात् विनाश होस् ! केही भन्दछन् कि وَيْل नरकको एकवादी (उपत्यका) को नाम हो । यो आयत यस सूर:मा पटक-पटक दोहोऱ्याइएको छ । यसकारण कि प्रत्येक झुठ्लाउनेवालाको अपराध अर्कोभन्दा भिन्न प्रकारको हुनेछ तथा यसै हिसाबले यातनाहरू पनि अनेक प्रकारका हुनेछन् । यस विनाशका विभिन्न प्रकार छन् । जसलाई झुठ्लाउनेहरूका लागि अलग-अलग वर्णन गरिएको छ । (फ़तहुल क़दीर)

أَلَمْ نُهْلِكِ الْأَوَّلِينَ ﴿١٦﴾

(१६) के हामीले पूर्वका मानिसहरूलाई नष्ट गरेनौं ?

ثُمَّ نُتْبِعُهُمُ الْآخِرِينَ ﴿١٧﴾

(१७) अनि हामीले उनका पश्चात पछिल्लाहरूलाई ल्यायौं ।[1]

كَذَٰلِكَ نَفْعَلُ بِالْمُجْرِمِينَ ﴿١٨﴾

(१८) हामी पापीहरूका साथ यसैप्रकार गर्दछौं ।[2]

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿١٩﴾

(१९) त्यसदिन झुठ्लाउनेहरूका लागि विनाश छ ।

أَلَمْ نَخْلُقكُّم مِّن مَّاءٍ مَّهِينٍ ﴿٢٠﴾

(२०) के हामीले तिमीलाई तुच्छ जलबाट (वीर्यबाट) पैदा गरेनौं ?

فَجَعَلْنَاهُ فِي قَرَارٍ مَّكِينٍ ﴿٢١﴾

(२१) अनि हामीले त्यसलाई सुदृढ (एवं सुरक्षित) स्थानमा राख्यौं ।[3]

إِلَىٰ قَدَرٍ مَّعْلُومٍ ﴿٢٢﴾

(२२) एउटा निर्धारित समयमा ।

فَقَدَرْنَا فَنِعْمَ الْقَادِرُونَ ﴿٢٣﴾

(२३) अनि हामीले अनुमान लगायौं[4] त हामी कति राम्रो अनुमान लगाउनेवाला हौं ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٢٤﴾

(२४) त्यस दिन झुठ्लाउनेहरूका लागि विनाश छ ।

أَلَمْ نَجْعَلِ الْأَرْضَ كِفَاتًا ﴿٢٥﴾

(२५) के हामीले धर्तीलाई समेट्नेवाली बनाएनौं ?

[1]अर्थात् मक्काका काफ़िर तथा उनीसित सहमत मानिस जसले रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमलाई झुठ्लाए ।

[2]अर्थात् दण्ड दिन्छौं लोकमा अथवा परलोकमा ।

[3]अर्थात् माताका गर्भाशयमा ।

[4]अर्थात् गर्भको अवधिसम्म ६ अथवा ९ महीना ।

[5]अर्थात् आमाका गर्भाशयमा शारीरिक संरचना एवं बनौटको सही अनुमान गर्‍यौं कि दुबै आँखा, दुबै कान, दुबै हात तथा खुट्टाहरूका बीच कति दुरी रहनुपर्छ ।

أَحْيَآءً وَّأَمْوَاتًا ﴿٢٦﴾

(२६) जीवितहरूलाई पनि तथा मृतकहरूलाई पनि ।[1]

وَّجَعَلْنَا فِيهَا رَوَاسِىَ شَـٰمِخَـٰتٍ وَّأَسْقَيْنَـٰكُم مَّآءً فُرَاتًا ﴿٢٧﴾

(२७) तथा हामीले त्यसमा उच्च (एवं ठूला) पर्वत बनाइदियौं[2] तथा तिमीलाई सिंच्नेवाला मीठो पानी पिलायौ ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٢٨﴾

(२८) त्यस दिन झुठ्लाउनेहरूका लागि विनाश छ ।

ٱنطَلِقُوٓا۟ إِلَىٰ مَا كُنتُم بِهِۦ تُكَذِّبُونَ ﴿٢٩﴾

(२९) त्यस (नरक) तिर जाउ जसलाई तिमी झुठ्लाउँदै रहन्थ्यौ ।[3]

ٱنطَلِقُوٓا۟ إِلَىٰ ظِلٍّ ذِى ثَلَـٰثِ شُعَبٍ ﴿٣٠﴾

(३०) हिंड तीन शाखाहरू भएकातिर ।[4]

لَّا ظَلِيلٍ وَلَا يُغْنِى مِنَ ٱللَّهَبِ ﴿٣١﴾

(३१) जो वास्तवमा न छायाँ दिनेवाली छ तथा न ज्वालाबाट बचाउन सक्दछ ।[5]

إِنَّهَا تَرْمِى بِشَرَرٍ كَٱلْقَصْرِ ﴿٣٢﴾

(३२) निःसन्देह (नरक) फिलिङ्गाहरू फ्याँक्दछ जो महल जस्ता छन् ।[6]

كَأَنَّهُۥ جِمَـٰلَتٌ صُفْرٌ ﴿٣٣﴾

(३३) जस्तो कि उनी पहेंला ऊट हुन् ।[7]

---

[1]अर्थात् धर्ती जीवितहरूलाई आफूमाथि तथा मृतकहरूलाई आफूभित्र समेटदछ ।

[2]رَوَاسِيَ، رَاسِيَةٌ को बहुवचन हो ثَوَابِتُ जमेका पर्वत, شَامِخَاتٌ अग्ला ।

[3]यी फरिश्ताहरू नरकवासीहरूसित भन्नेछन् ।

[4]नरकवाट जो धूँवा उठ्नेछ त्यो तीन दिशाहरूमा फैलनेछ, अर्थात् जस्तो (पर्खाल) अथवा रुखको छायाँ हुन्छ जसमा मानिस सुख-सुविधा प्रतीत गर्दछ। यस धूँवाबाट वास्तवमा यसप्रकारको छायाँ हुनेछैन जसमा नरकवासीहरूलाई सुख प्राप्त हुनेछ ।

[5]अर्थात् नरकको तपनबाट बच्नु पनि संम्भव हुनेछैन ।

[6]यसको एउटा अरु अनुवाद छ, जो काठका मुढा अर्थात् भारी टुक्राका समान छन् । मुढाको अर्थ शहतीरका टुक्रा जसलाई गैली पनि भन्दछन् ।

[7]صُفْرٌ यो أَصْفَرُ (पहेंलो) को वहुवचन हो किन्तु अरबमा यसको प्रयोग कालाका अर्थमा पनि छ। यस अर्थका आधारमा अभिप्राय यो हो कि त्यसको एउटा-एउटा फिलिङ्गो यति ठूलो हुनेछ जस्तै महल अथवा दुर्ग । अनि प्रत्येक फिलिङ्गाका

وَيۡلٌ يَوۡمَئِذٍ لِّلۡمُكَذِّبِينَ ﴿٣٤﴾

(३४) त्यसदिन झुठ्लाउनेहरूको दुर्गति छ ।

هَٰذَا يَوۡمُ لَا يَنطِقُونَ ﴿٣٥﴾

(३५ आज (को दिन) त्यो दिन हो कि यिनी बोल्न पनि सक्ने छैनन् ।[1]

وَلَا يُؤۡذَنُ لَهُمۡ فَيَعۡتَذِرُونَ ﴿٣٦﴾

(३६) न उनीहरूलाई बहाना गर्नुको आज्ञा दिइनेछ ।[2]

وَيۡلٌ يَوۡمَئِذٍ لِّلۡمُكَذِّبِينَ ﴿٣٧﴾

(३७) त्यसदिन झुठ्लाउनेहरूको खराबी छ ।

هَٰذَا يَوۡمُ ٱلۡفَصۡلِۖ جَمَعۡنَٰكُمۡ وَٱلۡأَوَّلِينَ ﴿٣٨﴾

(३८) यो हो निर्णयको दिन, हामीले तिमीलाई तथा पूर्वका मानिसहरूलाई (सबैलाई) एकत्रित गरिसकेका छौं ।[3]

فَإِن كَانَ لَكُمۡ كَيۡدٌ فَكِيدُونِ ﴿٣٩﴾

(३९) त यदि तिमी मसित कुनै चाल चाल्न सक्छौ भने चाल ।[4]

यति ठूला-ठूला खण्ड हुनेछन् जस्तो ऊट हुनेछन् ।

[1]महशरमा काफ़िरहरूको विभिन्न दशा हुनेछ । एक समय त्यो हुनेछ जब उनीहरू त्यहाँ पनि झूठ बोल्नेछन् अनि अल्लाह तआलाको उनका मुखहरूमा मोहर (छाप) लगाइदिनेछ तथा उनका हात-खुट्टा साक्ष्य दिनेछन् । अनि जुन क्षणमा उनलाई नरकमा लगिराखिएको हुनेछ त्यस समय व्याकुलता एवं व्यग्रताको स्थितिमा उनी लाटो हुनेछन् । केही विद्हरू भन्छन् कि बोल्नेछन् त अवश्य किन्तु उनीसित कुनै तर्क हुनेछैन । मानौं उनीहरूलाई कुरा गर्न नै आउँदैन । जस्तै हामी संसारमा पनि यस्ता व्यक्तिका बारेमा भन्दछौं जससित सन्तोषजनक तर्क हुँदैन, त्यो त हाम्रा अगाडि बोल्नै सकेनन् ।

[2]अभिप्राय यो हो कि उनका पासमा प्रस्तुत गर्नका लागि कुनै उचित तर्क नै हुनेछैन जसलाई उनी प्रस्तुत गरेर मुक्त हुनसकून् ।

[3]यो अल्लाह तआलाले भक्तहरूलाई सम्बोधित गर्नेछ कि हामीले तिमीलाई आफ्ना पूर्ण सामर्थ्यले निर्णय गर्नका लागि एउटै मैदानमा एकत्रित गरिहालेका छौं ।

[4]घोर धम्की तथा चेतावनी छ कि यदि तिमी मेरो पकडबाट निस्कन सक्दछौ भने निस्केर देखाउ, परन्तु त्यहाँ कसमा यो शक्ति हुनेछ ? यो आयत पनि यस्तै छ जस्तो यो आयत छ :

(४०) दु:ख छ त्यस दिन झुठ्लाउनेहरूका लागि खेद (सर्वनाश) ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٠﴾

(४१) नि:सन्देह सदाचारी मानिस छायाँमा छन्[1] तथा प्रवाहित स्रोतहरूमा ।

إِنَّ الْمُتَّقِينَ فِي ظِلَالٍ وَعُيُونٍ ﴿٤١﴾

(४२) तथा ती फलहरूमा जसको तिनीहरू इच्छा गर्दछन् ।[2]

وَفَوَاكِهَ مِمَّا يَشْتَهُونَ ﴿٤٢﴾

(४३) (हे स्वर्गवालाहरू !) खाउ-पिउ आनन्दले आफूले गरिएका कर्महरूका प्रतिफल स्वरुप ।[3]

كُلُوا وَاشْرَبُوا هَنِيئًا بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٤٣﴾

(४४) नि:सन्देह हामी पुण्य गर्नेहरूलाई यसैप्रकार प्रतिफल दिन्छौं ।[4]

إِنَّا كَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿٤٤﴾

﴿ يَٰمَعْشَرَ الْجِنِّ وَالْإِنسِ إِنِ اسْتَطَعْتُمْ أَن تَنفُذُوا مِنْ أَقْطَارِ السَّمَٰوَٰتِ وَالْأَرْضِ فَانفُذُوا ﴾

हे जिन्न तथा मानव समूह, यदि तिमीमा आकाशहरू एवं धतीबाट निस्किजानुको शक्ति छ भने निस्केर भाग । (अर्रहमान-३३)

[1]अर्थात् रुख तथा भवनहरूका छायाँ, आगोका धूँवाको छायाँ हुनेछैन, जस्तो मुश्रिकहरूको लागि हुनेछ ।

[2]प्रत्येक प्रकारका फल, जहिलेपनि इच्छा गर्नेछन् अगाडि आइहाल्ने छन् ।

[3]यो अनुग्रह स्वरुप उनीसित भनिनेछ بما كُنْتُم मा بَا कारणवाची हो, अर्थात् स्वर्गका यी वरदान ती सत्कर्महरूका कारण तिमीलाई प्राप्त हुनेछन् जो तिमी संसारमा गर्दैरह्यौ । यसको अभिप्राय यो हो कि अल्लाहको कृपाको प्राप्तिको साधन, जसका कारण मानिस स्वर्गमा प्रवेश पाउनेछ, पुण्यका कर्म हुन् । जो विना राम्रा कर्म नै अल्लाहको दया तथा क्षमाका उम्मेदवार बन्दछन्, उनको उदाहरण यस्तै छ जस्तो भूमिमा हल चलाओस् र बीउ नछरिकन उपजको आशा राखोस्, अथवा कैक्टस् (काँडा भएको विरुवा) रोपेर स्वादिष्ट फलको आशा राखोस् ।

[4]यस कुराको प्रलोभन एवं निर्देश छ कि यदि परलोकमा शुभ परिणामको इच्छा राख्दछौ भने संसारमा नेकी (सत्कर्म) तथा भलाईको मार्ग अपनाउ ।

وَيۡلٞ يَوۡمَئِذٖ لِّلۡمُكَذِّبِينَ ٤٥

(४५) त्यस दिन झुठ्लाउनेहरूका लागि दु:ख (खेद) छ ।[1]

كُلُواْ وَتَمَتَّعُواْ قَلِيلًا إِنَّكُم مُّجۡرِمُونَ ٤٦

(४६) हे (झुठ्लाउनेहरू !) तिमी (संसारमा) केही खाउ-पिउ तथा लाभ उठाइहाल, नि:सन्देह तिमी पापी हौ ।[2]

وَيۡلٞ يَوۡمَئِذٖ لِّلۡمُكَذِّبِينَ ٤٧

(४७) त्यस दिन झुठ्लाउनेहरूका लागि विनाश छ ।

وَإِذَا قِيلَ لَهُمُ ٱرۡكَعُواْ لَا يَرۡكَعُونَ ٤٨

(४८) उनीसित जब भनिन्छ कि रुकूअ गर त गर्दैनन् ।[3]

وَيۡلٞ يَوۡمَئِذٖ لِّلۡمُكَذِّبِينَ ٤٩

(४९) त्यसदिन झुठ्लाउनेहरूका लागि विनाश छ ।[4]

فَبِأَيِّ حَدِيثِۭ بَعۡدَهُۥ يُؤۡمِنُونَ ٥٠

(५०) अब यस (कुर्आन) का पश्चात कुन कुरोमा ईमान स्वीकार गर्नेछन् ?[5]

---

[1]कि सदाचारीहरूका भागमा त स्वर्गको सुख आओस् तथा यिनीहरूको भाग्यमा दुर्भाग्य ।

[2]यो प्रलयलाई झुठ्लाउनेहरूलाई सम्बोधित गरिएको छ, तथा यो आदेश धम्की तथा चेतावनीका लागि छ । ठीक छ केही दिनका लागि आनन्द लिइहाल, तिमीजस्ता अपराधीहरूका लागि यातनाको शिकंजा तयार छ ।

[3]अर्थात् उनलाई नमाज़ पढ्नुको आदेश दिईन्छ त नमाज़ पढ्दैनन् ।

[4]अर्थात् उनका लागि जो अल्लाहका आदेश एवं आज्ञा तथा निषेधहरूलाई मान्दैनन् ।

[5]अर्थात् जब यस कुर्आनप्रति विश्वास गर्ने छैनन् त यसका पश्चात कुनचाहिं वाणी छ जसमा ईमान स्वीकार गर्नेछन् ? यहाँपनि (हदीस) कुर्आनलाई भनिएको छ । एउटा कमजोर रिवायतमा (निम्न स्तरको) भनिएको छ कि "सूर: तीन" को अन्तिम आयत أَلَيۡسَ ٱللَّهُ .... الآية पढ्दछ भने त्यसले उत्तरमा بلى و أنا على ذلك من الشهدين तथा "सूर: क़ियाम:" का अन्तका उत्तरमा بَلَى तथा فبأى حديث بعده يؤمنون का उत्तरमा آمنا بالله भनोस् । (अबू दाऊद बाबु मिक्दारिर्रुकूअे वस सूजूद तथा ज़ईफु अबी दाऊद, लिल अलबानी) केही विद्वानहरूको विचार छ कि जो सुन्दछ त्यसले पनि उत्तर दिनुपर्छ ।

## सूरतुन नबा-७८

سُورَةُ النَّبَإِ

सूरतुन नबा मक्कामा अवतरित भएको तथा यसमा चालीस आयतहरू एवं दुई रुकूअ छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

عَمَّ يَتَسَاءَلُونَ ﴿١﴾

(१) यी मानिस कुन वस्तुको सोधपूछ गरिराखेका छन् ?[1]

عَنِ النَّبَإِ الْعَظِيمِ ﴿٢﴾

(२) त्यस ठूलो सूचनाको ?

الَّذِي هُمْ فِيهِ مُخْتَلِفُونَ ﴿٣﴾

(३) जसमा यिनी विभिन्न मत छन् ।[2]

كَلَّا سَيَعْلَمُونَ ﴿٤﴾

(४) निश्चित रुपमा यिनी अहिले जानिहाल्नेछन् ।

---

[1]**सूरतुन नबा** : जब नबी (सल्लल्लाहु अलैहि व सल्लम) लाई नबूअतले सम्मानित गरियो तथा उहाँले एकेश्वरवाद तथा प्रलय आदिको चर्चा गर्नुभो तथा पवित्र ईशवाणी कुर्आन सुनाउनुभयो त काफ़िर तथा मुश्रिकहरूले एक अर्कासित प्रश्न गर्न आरम्भ गरे कि के यो सम्भव छ ? जस्तो कि यो व्यक्ति दावा गरिराखेको छ वा यो कुर्आन वास्तवमा अल्लाहको तर्फबाट अवरित गरिएको छ जस्तो कि मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) भन्दछ । प्रश्नद्वारा अल्लाहले पहिला यी कुराहरूको वास्तविक स्थिति उजागर गऱ्यो जो उनको हो । अनि स्वयंले नै उत्तर दियो ।

[2]अर्थात् जुन ठूलो सूचनाका सम्बन्धमा प्रश्न छ । यस ठूलो सूचनासित अभिप्राय केहीले पवित्र कुर्आन लिएका छन् । काफ़िर त्यसका विषयमा विभिन्न कुरा गर्दथे । कोही त्यसलाई जादू कोही ज्योतिष कोही कविता तथा कोही प्राचीन कथा भन्दथ्यो । केहीका विचारमा यसको अभिप्राय प्रलय घटित हुनु हो तथा पुन: जीवित हुनु । यसमा पनि उनका मध्ये केही मतभेद थियो कोही प्रारम्भदेखि यसको इन्कार कि यिनका बीच मतभेद छ, कोही त्यसका सन्दर्भमा सोधपूछ गर्दथ्यो कि मात्र सन्देहको प्रदर्शन । केही भन्दछन् कि प्रश्न त विश्वासको अधिकता तथा अधिक जानकारीका लागि थियो तथा काफ़िरहरूको उपहास एवं प्रतिहास स्वरुप ।

ثُمَّ كَلَّا سَيَعْلَمُونَ ٥

(५) अनि निश्चित रुपले उनीहरूलाई अति शीघ्र ज्ञान हुनेछ ।[1]

أَلَمْ نَجْعَلِ الْأَرْضَ مِهَادًا ٦

(६) के हामीले धर्तीलाई फ़र्श बनाएनौं ?[2]

وَالْجِبَالَ أَوْتَادًا ٧

(७) तथा पर्वतहरूलाई किल्ला बनाएनौं ?[3]

وَخَلَقْنَاكُمْ أَزْوَاجًا ٨

(८) तथा हामीले तिमीलाई जोडा-जोडा पैदा गर्‍यौं ।[4]

وَجَعَلْنَا نَوْمَكُمْ سُبَاتًا ٩

(९) तथा हामीले तिम्रो निद्रालाई तिम्रो विश्रामको कारण बनायौं ।[5]

وَجَعَلْنَا اللَّيْلَ لِبَاسًا ١٠

(१०) तथा रात्रिलाई हामीले पर्दा बनायौं ।[6]

[1]यो भ्रूपार हो कि शीघ्र नै सबै कुराको ज्ञान हुनेछ । अगाडि अल्लाह आफ्नो कारीगरी तथा महान सामर्थ्यको चर्चा गरिराखेको छ । ताकि अद्वैतको तथ्य उनका अगाडि स्पष्ट होस् तथा ईशदूतले उसलाई जुन कुराको आमन्त्रण दिइराखेको छ, त्यसमा विश्वास गर्न उनका लागि सरल हुन जाओस् ।

[2]अर्थात् फर्शका समान तिमी धर्तीमा हिंड्डुल गर्दछौ, उठबस गर्छौ तथा सुत्छौ, जाग्छौ तथा सबै कामकाज गर्दछौ । धर्तीलाई घुम्दैरहन दिएन ।

[3] أَوْتَادْ यो وَتَدٌ को बहुवचन हो । किल्ला अर्थात् पर्वतहरूलाई धर्तीका लागि किल्ला बनायो ताकि धर्ती स्थिर रहोस्, न हल्लोस् । किनकि हिंड्नु-डुल्नुको दशामा धर्ती रहन योग्य नै हुँदैन ।

[4]पुरुष-स्त्री, भाले-पोथी, अर्थात् أَزْوَاجٌ को अर्थ प्रकार तथा वर्ण हो । अर्थात् अनेक रुप तथा रङ्गहरूमा पैदा गर्‍यो । स्वरुप, कुरुप, लामो, सानो, गोरो, कालो ।

[5] سُبَاتْ को अर्थ काट्नु हो, रात पनि जीव-जन्तुहरूको सम्पूर्ण गतिविधिहरूलाई कम गरिदिन्छ, ताकि शान्ति हुन जाओस् तथा उनी आरामसित सुत्न सकून् । अथवा अभिप्राय यो हो कि रात्रि तिम्रा कर्महरूलाई समाप्त गरिदिन्छ । कार्य समाप्त हुनुको अर्थ आरम्भ हो ।

[6]अर्थात् रातिको अँध्यारो तथा तमस प्रत्येक वस्तुलाई आफ्ना अन्धकारमा ढाक्दछ जस्तै कपडा (वस्त्र) मनुष्यको शरीरलाई ढाक्दछ ।

وَجَعَلْنَا النَّهَارَ مَعَاشًا ﴿١١﴾

(११) तथा दिनलाई हामीले जीविका उपार्जनको समय बनायौं ।[1]

وَبَنَيْنَا فَوْقَكُمْ سَبْعًا شِدَادًا ﴿١٢﴾

(१२) तथा तिमीमाथि हामीले सात सुदृढ आकाश बनायौं ।[2]

وَجَعَلْنَا سِرَاجًا وَهَّاجًا ﴿١٣﴾

(१३) तथा एउटा चम्किराखेको ज्योति दीप पैदा गऱ्यौं ।[3]

وَأَنزَلْنَا مِنَ الْمُعْصِرَاتِ مَاءً ثَجَّاجًا ﴿١٤﴾

(१४) तथा मेघहरूबाट हामीले अत्याधिक प्रवाहित जल वर्षायौं ।[4]

لِّنُخْرِجَ بِهِ حَبًّا وَنَبَاتًا ﴿١٥﴾

(१५) ताकि त्यसबाट अन्य तथा वनस्पति उब्जाऊन् ।[5]

وَجَنَّاتٍ أَلْفَافًا ﴿١٦﴾

(१६) तथा घना बगैंचा पनि उमारुन् ।[6]

إِنَّ يَوْمَ الْفَصْلِ كَانَ مِيقَاتًا ﴿١٧﴾

(१७) नि:सन्देह निर्णयको दिन निर्धारित छ ।[7]



[1]अभिप्राय यो हो कि दिनलाई प्रकाशमान बनायो ताकि मानिसहरू जीविका उपार्जनका लागि परिश्रम गर्न सकून् ।

[2]यिनमा प्रत्येकको दूरी पाँच सय वर्षका समान छ । जो त्यसको दृढताको प्रमाण हो ।

[3]यसबाट तात्पर्य सूर्य हो तथा جَعَلَ को अर्थ خَلَقَ हो ।

[4] مُعْصِرَات ती बदलीहरू जो जलले भरिएको हुन्छ । किन्तु अझै वर्षेको छैन । जस्तै المرأة المُعْتَصِرة त्यस स्त्रीलाई भन्दछन् जसको रजकात (मासिक) ثَجَّاجًا होस् । अधिक प्रवाहित जल ।

[5] حَبّ (दाना) त्यो अन्य जसलाई खानका लागि एकत्र गरिन्छ । जस्तै गहूँ, चामल, जौं, मकै आदि तथा वनस्पति तथा तरकारीहरू एवं स्याउलो जो पशु खान्छन् ।

[6] أَلْفَافًا शाखाहरूको अधिकताका कारण एक-अर्कासित जोडिएका रुखहरू अर्थात् घना बगैंचा ।

[7]अर्थात् आदि तथा अन्त्य सबैका एकत्र हुने तथा वचनको दिन । यसलाई निर्णयको दिन यसकारण भनियो कि त्यस दिन एकत्रित हुनुको उद्देश्य नै सबै मानिसहरूको उनका कर्महरूका अनुसार निर्णय गर्नु हो ।

يَوْمَ يُنفَخُ فِي الصُّورِ فَتَأْتُونَ أَفْوَاجًا ﴿١٨﴾

(१८) जुन दिन कि नरसिंघा फुकिनेछ, अनि तिमी सबै समूह-समूहमा बनेर आउनेछौ ।[1]

وَفُتِحَتِ السَّمَاءُ فَكَانَتْ أَبْوَابًا ﴿١٩﴾

(१९) तथा आकाश खोलिनेछ, त त्यसमा ढोकाहरू हुनजानेछन् ।[2]

وَسُيِّرَتِ الْجِبَالُ فَكَانَتْ سَرَابًا ﴿٢٠﴾

(२०) तथा पर्वत चलाइनेछन् त उनी सेतो बालुवा हुन जानेछन् ।[3]

إِنَّ جَهَنَّمَ كَانَتْ مِرْصَادًا ﴿٢١﴾

(२१) निःसन्देह नरक घातमा छ ।[4]

لِّلطَّاغِينَ مَآبًا ﴿٢٢﴾

(२२) उद्दण्डहरूको स्थान त्यही हो ।

[1]केही धर्मविद्हरूले यसको भावार्थ यो वर्णन गरेका छन् कि प्रत्येक समुदाय आफ्ना रसूलका साथ हश्रका मैदानमा आउनेछन् । यो दोस्रो नफ़खा (फूँक) हुनेछ जसमा सबै मानिस चिहानहरूबाट जीवित भएर निस्कनेछन् । अल्लाह (तआला) ले आकाशबाट पानी वर्षाउनेछ जसमा मानिस खेतीका सामान उम्रने छन् मानिसको प्रत्येक अङ्ग सडेर जानेछ किन्तु ढाडको अस्थि (हड्डी) को अन्तिम टुप्पा, त्यसैबाट प्रलयका दिन सृष्टिलाई पुनः बनाइनेछ । (सहीह बुख़ारी तफ़सीर सूरते अम्म)

[2]अर्थात् फरिश्ताहरूका अवतरणका लागि मार्ग बन्नेछन् । तथा धर्तीमा ओर्लेर आउनेछन् ।

[3]سَـــرَابٌ त्यो रेत (बालुवा, कण) जो टाढाबाट पानी जस्तो देखिन्छ । पर्वत पनि रेतका समान टाढाबाट देखिने वस्तु बनेर रहनेछन् । तथा पुनः सर्वथा लुप्त भइहाल्नेछन् । उनको चिन्हसम्म रहने छैन । केही भन्दछन् कि कुरआनमा पर्वतहरूका अनेक दशाहरू वर्णित गरिएको छ । जसमा अनुकूलता यसप्रकार छ कि (१) पहिला तिनलाई कण-कण गरिदिइनेछ । ﴿فَدُكَّتَا دَكَّةً وَاحِدَةً﴾ (अल हाक़्क़ा १४) (२)) ती धुनेका रुई (कपास) का समान हुनेछन् ﴿كَالْعِهْنِ الْمَنفُوشِ﴾ (अल-क़ारिअः- ५) (३) ती गर्द गोबर (धूल-कण) हुन जानेछन्, ﴿فَكَانَتْ هَبَاءً مُّنبَثًّا﴾ (अल वाक़िअः-६) (४) तिनलाई उडाइदिइनेछ । ﴿يَنسِفُهَا رَبِّي نَسْفًا﴾ (ताहा-१०५) तथा पाँचौं स्थिति यो हो कि तिनी मृगतृष्णा हुनजानेछन् अर्थात् रहने छैनन् जस्तो कि यस स्थानमा छ । (फ़तहुल क़दीर)

[4]घात यस्तो स्थानलाई भन्दछन् जहाँ लुकेर प्रतीक्षा गरिन्छ कि त्यहाँबाट गुज्रन्छ भने त्यसमाथि प्रहार गरियोस् । नरकका अधिकारी पनि यसैप्रकार नरकवासीहरूको प्रतीक्षामा घात लगाएका छन् अथवा नरक स्वयं अल्लाहको आज्ञाले घात लगाएर काफ़िरहरूको प्रतीक्षा गरिराखेको छ ।

لَّٰبِثِينَ فِيهَآ أَحْقَابًا ﴿٢٣﴾

(२३) त्यसमा उनीहरू कैयन् युगहरू (एवं शताब्दीहरू) सम्म रहनेछन् ।[1]

لَّا يَذُوقُونَ فِيهَا بَرْدًا وَلَا شَرَابًا ﴿٢٤﴾

(२४) न कहिल्यै त्यसमा चिसोको स्वाद चाख्नेछन् न पानीको ।

إِلَّا حَمِيمًا وَغَسَّاقًا ﴿٢٥﴾

(२५) गरम पानी एवं बगिराखेको पीपका अतिरिक्त ।[2]

جَزَآءً وِفَاقًا ﴿٢٦﴾

(२६) (उनलाई) पूर्ण रुपमा प्रतिफल प्राप्त हुनेछ ।[3]

إِنَّهُمْ كَانُوا۟ لَا يَرْجُونَ حِسَابًا ﴿٢٧﴾

(२७) उनीहरूलाई त हिसाबको सम्भावना नै थिएन ।[4]

وَكَذَّبُوا۟ بِـَٔايَٰتِنَا كِذَّابًا ﴿٢٨﴾

(२८) तथा नकारि-नकारि हाम्रा आयतहरूलाई झुठ्लाउँथे ।

وَكُلَّ شَىْءٍ أَحْصَيْنَٰهُ كِتَٰبًا ﴿٢٩﴾

(२९) हामीले प्रत्येक कुरोलाई लेखेर सुरक्षित राखेका छौं ।[5]

---

[1] أَحْقَاب बहुवचन हो حُقُب को, अर्थ हो युग । अभिप्राय सधैं तथा नित्य छ, उनी सधैंका लागि नरक़मा रहनेछन् । यो यातना काफ़िर तथा मुश्रिकहरूको लागि छ ।

[2] जो नरक़वासीहरूका शरीरबाट निस्कनेछ ।

[3] अर्थात् यो यातना उनका कर्महरूका अनुकूल छ जो उनी संसारमा गर्दैरहे ।

[4] यो पहिला वाक्यको कारण भनिदैछ अर्थात् उनी उपरोक्त दण्डका भागी यसकारण वने कि मृत्युका पश्चात उनी पुनर्जीवनलाई मान्दैनथे कि हिसाब कितावको आशा राख्थे ।

[5] अर्थात् लौहे महफ़ूज़मा । अथवा त्यो लेख अभिप्रेत छ जो फरिश्ताहरू लेख्दै रहे । प्रथम भावार्थ अधिक सही छ । जस्तो कि (सूरः यासीन-१२) मा भन्यो :

﴿وَكُلَّ شَىْءٍ أَحْصَيْنَٰهُ فِىٓ إِمَامٍ مُّبِينٍ﴾

فَذُوقُوا فَلَن نَّزِيدَكُمْ إِلَّا عَذَابًا ﴿٣٠﴾

(३०) अब तिमी (आफूले गरिएको) स्वाद चाख, हामी तिम्रो यातना नै बढाउँदै जानेछौं ।[1]

إِنَّ لِلْمُتَّقِينَ مَفَازًا ﴿٣١﴾

(३१) नि:सन्देह सदाचारीहरूका लागि सफलता छ ।[2]

حَدَائِقَ وَأَعْنَابًا ﴿٣٢﴾

(३२) बगैंचाहरू छन् तथा अंगूर छन् ।[3]

وَكَوَاعِبَ أَتْرَابًا ﴿٣٣﴾

(३३) तथा नवयुवती कुमारी समआयु स्त्रीहरू छन् ।[4]

وَكَأْسًا دِهَاقًا ﴿٣٤﴾

(३४) तथा छचल्किएका मदिराका प्याला छन् ।[5]

لَّا يَسْمَعُونَ فِيهَا لَغْوًا وَلَا كِذَّابًا ﴿٣٥﴾

(३५) त्यहाँ न त उनी अश्लील कुरा सुन्नेछन् तथा न असत्य कुरा सुन्नेछन् ।[6]

---

[1]यातना बढाउनुको अभिप्राय हो कि अब यो यातना स्थायी छ । जब उनका छाला गलेर जानेछन् त अर्को फेरिदिनेछन् । (अन-निसा-५६) जब आगो निभ्न थाल्छ त फेरि प्रज्वलित गरिदिइनेछ । (सूर: बनी इस्राईल-९७)

[2]दुर्भाग्यशालीहरूको चर्चाको पश्चात अब यो सौभाग्यशालीहरूको चर्चा तथा ती उपहारहरूको वर्णन हो जसबाट उनी पारलौकिक जीवनमा सफल हुनेछन् । यो सफलता एवं उपहार उनीहरूलाई सदाचारका कारण प्राप्त हुनेछन् । सदाचार ईमान तथा आज्ञापालनका मागहरूलाई पूरा गर्नुको माग हो । भाग्यशाली त्यो हो जो ईमान स्वीकार्नुको पश्चात संयम तथा असल कामहरूको प्रयोजन गर्दछन् ।

[3]यो مَفَازًا सित बदल । स्थानापन्न छ ।

[4] كَوَاعِب बहुवचन हो كَاعِبَة को यो كَعْبٌ (कुर्कुच्चा) बाट छ जस्तै कुर्कुच्चा फुकेको हुन्छ । तिनका स्तनहरूमा पनि यस्तै उभार हुनेछ । जो उनको शोभा तथा सुन्दरताको द्योतक हो ।|أَتْرَاب समायु ।

[5] دِهَاقًا भरिएका अथवा लगातार एक पछि अर्को अथवा सफा तथा स्वच्छ كَأْس यस्ता प्यालाहरूलाई भन्दछन् जो पूर्णरुपले भरिएको होस् ।

[6]अर्थात् कुनै व्यर्थ तथा फाल्तु कुरा त्यहाँ हुनेछन्, न एक-अर्कासित मिथ्या कुरा गर्नेछ ।

جَزَآءً مِّن رَّبِّكَ عَطَآءً حِسَابًا ﴿٣٦﴾

(३६) (उनलाई) तिम्रा प्रभुका तर्फबाट (उनका सत्कर्महरूको) यो प्रतिफल प्राप्त हुनेछ। जो पर्याप्त उपहार हुनेछ।[1]

رَّبِّ السَّمَٰوَٰتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا الرَّحْمَٰنِ لَا يَمْلِكُونَ مِنْهُ خِطَابًا ﴿٣٧﴾

(३७) (त्यस) प्रभुको तर्फबाट प्राप्त हुनेछ जो कि आकाशहरूको धर्तीको तथा जे-जति त्यसका मध्ये छ, तिनको प्रभु हो तथा अत्यन्त दयालु छ। कसैलाई त्यससित कुराकानी गर्नुको अधिकार हुनेछैन।[2]

يَوْمَ يَقُومُ الرُّوحُ وَالْمَلَٰٓئِكَةُ صَفًّا لَّا يَتَكَلَّمُونَ إِلَّا مَنْ أَذِنَ لَهُ الرَّحْمَٰنُ وَقَالَ صَوَابًا ﴿٣٨﴾

(३८) जुन दिन आत्मा तथा फरिश्ताहरू पंक्तिवद्ध भएर उभिनेछन्,[3] त कोही कुरा गर्नसक्ने छैन, परन्तु जसलाई अत्यन्त दयालु आज्ञा दिन्छ तथा त्यो ठीक कुरा मुखबाट निकाल्छ।[4]

ذَٰلِكَ الْيَوْمُ الْحَقُّ فَمَن شَآءَ اتَّخَذَ إِلَىٰ رَبِّهِ مَـَٔابًا ﴿٣٩﴾

(३९ यो दिन सत्य छ,[5] अब जो चाहन्छ आफ्ना प्रभुका पास (सत्कर्म गरी) स्थान बनाइहालोस्।[6]

---

[1] عَطَاءً का साथ حِسَابًا अतिश्योक्तिका लागि आउँछ अर्थात् त्यहाँ अल्लाहका उपहारहरूको प्राचुर्य हुनेछ।

[2]अर्थात् त्यसको बडाई, भय तथा प्रताप यति हुनेछ कि आरम्भमा त्यससित कसैलाई कुरा गर्नुको साहस हुनेछैन। यसैकारण त्यसको अनुमति बिना कसैले सिफारिस (अभिस्तावना) का लागि मुख पनि खोल्ने छैन।

[3]यहाँ जिब्रील सहित रुहका कैयन् भावार्थ वर्णन गरिएका छन्। इमाम इब्ने कसीरले आदमका पुत्रहरू (मानिस) लाई أَشْبَهُ उचित मानेका छन्।

[4]यो अनुमति अल्लाह (तआला) फरिश्ताहरू तथा ईशदूतहरूलाई प्रदान गर्नेछ तथा उनीहरू जुन कुरा गर्नेछन् सत्य तथा ठीक नै हुनेछ, अथवा यो अर्थ हो कि अनुमति मात्र त्यसैलाई दिइनेछ। जसले सहीह भनेको हुन्छ अर्थात् धर्मसूत्र अद्वैतलाई स्वीकार गरिरहेको हुन्छ।

[5]अवश्य आउनेवाला छ।

[6]त्यस आगामी दिनलाई अगाडि राख्दै ईमान तथा समयको जीवन अपनाओस् ताकि त्यस दिन त्यसलाई त्यहाँ राम्रो स्थान प्राप्त होस्।

إِنَّآ أَنذَرۡنَٰكُمۡ عَذَابٗا قَرِيبٗا يَوۡمَ يَنظُرُ ٱلۡمَرۡءُ مَا قَدَّمَتۡ يَدَاهُ وَيَقُولُ ٱلۡكَافِرُ يَٰلَيۡتَنِي كُنتُ تُرَٰبَۢا ﴿٤٠﴾

(४०) हामीले तिमीलाई निकट भविष्यमा घटित हुने यातनाबाट तर्सायौं (तथा सावधान गऱ्यौं) ।[1] जुन दिन मनुष्यले आफ्ना हातहरूको कमाई देख्नेछ ।[2] तथा काफिरले भन्नेछ कि काश म माटो भइदिए ।[3]

## सूरतुल नाज़िआत-७९

سُورَةُ النَّازِعَاتِ

यो सूरः मक्कामा अवतरित भएको तथा यसमा ४६ आयतहरू एवं २ रुकूअ छन् ।

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

وَٱلنَّـٰزِعَٰتِ غَرۡقٗا ﴿١﴾

(१) डुबेर कठोरताले तान्नेहरूको सौगन्ध ।[4]

---

[1]अर्थात् केयामतका दिनको यातनासित जो निकट नै छ किनकि त्यो आउनु निश्चित छ तथा प्रत्येक वस्तु समीप नै छ । किनकि त्यसलाई आउनु नै पर्नेछ ।

[2]अर्थात् राम्रो वा नराम्रो कर्म जे पनि उसले संसारमा गऱ्यो त्यो अल्लाहकहाँ पुगिसकेको छ । केयामत (प्रलय) का दिन त्यो त्यसका समक्ष आउनेछ तथा त्यसले त्यसलाई देख्नेछ ﴿يُنَبَّؤُا ٱلۡإِنسَٰنُ يَوۡمَئِذِۭ بِمَا قَدَّمَ وَأَخَّرَ﴾ । (अल-कियामः १३)

[3]जब उसले आफ्ना भयानक परिणामको अवलोकन गर्दछ त यो कामना गर्नेछ । केही विदहरू भन्दछन् अल्लाह पशुहरूका बीच पनि न्यायोचित निर्णय गर्नेछ । यहाँसम्मकि एउटा सिङ्गो बाखाले सिङ नभएको बाखामाथि कुनै अत्याचार गरेको हुनेछ भने त्यसको पनि बदला दिलाउनेछ । यसका पश्चात अल्लाहले पशुहरूलाई आदेश दिनेछ कि माटो भइहाल त त्यो माटो हुनेछ । त्यस समय काफ़िरले पनि कामना गर्नेछन् कि काश उनीहरू पनि पशु हुन्थे तथा आज माटो बन्न जान्थे । (इब्ने कसीर)

[4]**सूरतुन नाजिआत :** نَزْعٌ को अर्थ हो जोडले तान्नु غَرْقًا डुबेर - यो प्राण निकाल्ने फरिश्ताहरूको विशेषण हो । फरिश्ताहरू काफ़िरहरूको प्राण बडो कडाईले निकाल्दछन् तथा शरीरमा डुबेर ।

وَالنّٰشِطٰتِ نَشْطًا ۝٢
(२) बन्धन खोलेर फुकाउनेहरूको सौगन्ध ।[1]

وَالسّٰبِحٰتِ سَبْحًا ۝٣
(३) तथा पौडदै हिंडनेहरूको सौगन्ध ।[2]

فَالسّٰبِقٰتِ سَبْقًا ۝٤
(४) अनि दगुरेर अगाडि बढ्नेहरूको सौगन्ध ।[3]

فَالْمُدَبِّرٰتِ اَمْرًا ۝٥
(५) अनि कार्यहरूको उपाय गर्नेहरूको सौगन्ध ।[4]

يَوْمَ تَرْجُفُ الرَّاجِفَةُ ۝٦
(६) जुन दिन कम्पित हुनेवाली काम्ने छ ।[5]

[1] نَشْط को अर्थ हो गाँठो फुकाउनु अर्थात् ईमान भएकाहरूको प्राण फरिश्ता सरलताले निकाल्दछन् । जस्तो गाँठो फुकाइयोस् ।

[2] سَبْح को अर्थ पौडिनु हो । फरिश्ता प्राण निकाल्नका लागि मानिसका शरीरमा पौडिन्छन्, घुम्छन् जस्तै गोताखोर मोती निकाल्नका लागि समुद्रको गहिराईमा पौडन्छ अथवा यो अभिप्राय हो कि अति तेज गतिले अल्लाहको आदेश लिएर आकाशहरूबाट अवतरित हुन्छन् किनकि तीब्रगामी घोडाहरूलाई पनि سَابِح भन्दछन् ।

[3]यी फरिश्ता अल्लाहको प्रकाशना ईशदूतहरूसम्म दगुरेर पुऱ्याउँछन्, ताकि शैतानलाई उनको पत्तो नहोस् । अथवा ईमान भएकाहरूको आत्मा स्वर्गतिर लैजानमा शीघ्रता गर्दछन् ।

[4]अर्थात् अल्लाह (तआला) जो काम उनलाई सुम्पिन्छ, उनी त्यसको व्यवस्था गर्दछन् । वास्तविक व्यवस्थापक त अल्लाह (तआला) नै छ । किन्तु जब अल्लाह (तआला) आफ्नो पूर्व तत्वदर्शीताले फरिश्ताहरूद्वारा काम गराउँछ त उनीहरूलाई पनि व्यवस्थापक भनिन्छ । यस आधारमा पाँचैवटा विशेषताहरू फरिश्ताहरूका हुन् तथा ती फरिश्ताहरूको अल्लाहले शपथ लिएको छ । शपथको उत्तर लुप्त छ । अर्थात् ﴿لَتُبْعَثُنَّ ثُمَّ لَتُنَبَّؤُنَّ بِمَا عَمِلْتُمْ﴾ "तिमी अवश्य जीवित गरिनेछौ तथा तिमीलाई तिम्रा कर्महरूका सम्बन्धमा सूचित गरिनेछ ।" कुर्आनले यस पुनर्जीवन तथा प्रतिकारका लागि कैयन् स्थानहरुमा सौगन्ध खाएको छ जस्तै सूरतुत्तगाबून-७ मा पनि अल्लाह (तआला) ले सौगन्ध खाएर उपरोक्त सम्बन्धहरूमा यस तथ्यको वर्णन गरेको छ । यो पुनर्जीवन तथा प्रतिफल कहिले हुनेछ ? यसलाई अगाडि स्पष्ट गरेको छ ।

[5]यो प्रथम नफख् (फूक) हुनेछ, जसलाई विनाशको फूँक भन्दछन् जसबाट पूर्ण धर्ती काम्न थाल्नेछ तथा प्रत्येक वस्तु विनष्ट हुनेछ ।

تَتْبَعُهَا الرَّادِفَةُ ۝٧

(७) त्यसका पश्चात एउटा पछाडि आउने (पछि-पछि) आउनेछ ।[1]

قُلُوبٌ يَوْمَئِذٍ وَاجِفَةٌ ۝٨

(८) (धेरै) हृदय त्यसदिन धड्किन्छन् ।[2]

أَبْصَارُهَا خَاشِعَةٌ ۝٩

(९) जसका आँखा तल हुनेछन् ।[3]

يَقُولُونَ أَإِنَّا لَمَرْدُودُونَ فِي الْحَافِرَةِ ۝١٠

(१०) भन्दछन् कि के हामी पहिला जस्तो स्थितिमा पुनः फर्काइनेछौं ?[4]

أَإِذَا كُنَّا عِظَامًا نَّخِرَةً ۝١١

(११) के त्यस समय जब हामी जीर्ण हड्डीहरूमा हुनेछौं ।[5]

قَالُوا تِلْكَ إِذًا كَرَّةٌ خَاسِرَةٌ ۝١٢

(१२) भन्दछन् कि यो फर्कनु फेरि हानिकारक छ ।[6] (ज्ञात हुनुपर्छ)

فَإِنَّمَا هِيَ زَجْرَةٌ وَاحِدَةٌ ۝١٣

(१३) त्यो त केवल एउटा (भयानक) झपार हो कि (जो उत्पन्न हुनासाथ)

---

[1]यो दोस्रो नफ़ख् हुनेछ। जसमा सबै जीवित हुनेछन् तथा चिहानहरूबाट निस्कनेछन् । यो दोस्रो नफ़ख् (फूँक) प्रथम फूँकका चालीस वर्ष पश्चात हुनेछ । यसलाई أَطْلَمْ; यसकारण भनिन्छ कि यो पहिला फूँककै पश्चात नै हुनेछ अर्थात् दोस्रो नफ़ख् पहिला नफ़खका पछि हुनेछ ।

[2]केयामतको भयानकता तथा भीषणताले ।

[3]अर्थात् أَبْصَارُ أَصْحَابِهَا यस्ता भयभीत हुनेछन् ।

[4]حَافِرَةٌ पहिलो स्थितिलाई भन्दछन् । यो केयामतको इन्कार गर्नेहरूको वचन हो कि हामी फेरि त्यसैप्रकार जीवित गरिनेछौं जस्तो मृत्युभन्दा पहिला थियौं ?

[5]यो क़यामत (प्रलय) इन्कारमा अधिक बल छ । कि हामी कसरी जीवित गरिनेछौं जबकि हाम्रा हड्डीहरू सडेर जानेछन् तथा कण-कण हुनेछन् ।

[6]यदि वास्तवमा यस्तो भयो जस्तो कि मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) भन्दछ त यो पूर्नजीवन हाम्रा लागि बडो हानिकारक हुनेछ ।

فَإِذَا هُم بِالسَّاهِرَةِ ﴿١٤﴾

(१४) उनी तत्क्षण मैदानमा एकत्रित हुनेछन् ।[1]

هَلْ أَتَاكَ حَدِيثُ مُوسَىٰ ﴿١٥﴾

(१५) के मूसा (अलैहिस्सलाम) को कथा पनि तिमीलाई ज्ञात छ ?

إِذْ نَادَاهُ رَبُّهُ بِالْوَادِ الْمُقَدَّسِ طُوًى ﴿١٦﴾

(१६) जबकि उनका प्रभुले उनलाई पवित्र मैदान तूवामा पुकाऱ्यो ।[2]

اذْهَبْ إِلَىٰ فِرْعَوْنَ إِنَّهُ طَغَىٰ ﴿١٧﴾

(१७) कि तिमी फ़िर्औनका पासमा जाउ उसले उद्दण्डता अपनाएको छ ।[3]

فَقُلْ هَل لَّكَ إِلَىٰ أَن تَزَكَّىٰ ﴿١٨﴾

(१८) त्यससित भन कि के तिमी आफ्नो सुधार तथा शोधन चाहन्छौ ?[4]

---

[1] سَاهِرَة सित अभिप्राय धर्तीको माथिको भाग अर्थात् मैदान हो । धर्तीका माथि भागलाई سَاهِرَة यसकारण भनिएको छ कि सबै जीवलाई सुत्नु-जाग्नु यसै धर्तीमा हुन्छ । केही विद भन्छन् कि उराठ मैदान तथा वनहरूमा भयका कारण मनुष्यलाई निद्रा आउँदैन तथा त्यो ब्युँझिरहन्छ यसकारण سَاهِرَة भनिन्छ (फ़तहुल क़दीर) जेहोस् यो क़यामतको चित्रण हो अनि एउटै फूँकमा सबै मैदानमा एकत्रित हुनेछन् ।

[2] यो त्यस समयको कथा हो जब मूसा (अलैहिस्सलाम) मदयनबाट फर्कंदा आगोको खोजीमा तूर पर्वतमा पुगेका थिए त त्यहाँ एउटा रुखको पछाडिबाट अल्लाहले मूसासित कुरा गऱ्यो । जस्तो कि सविस्तार सूरत ताहाका प्रारम्भमा गुज्रयो । طُوًى तूवा त्यस स्थानको नाम हो । कुरा गर्नुसित अभिप्राय नबूअत तथा रिसालत (दूतत्व) बाट सम्मानित गर्नु हो । अर्थात् मूसा अलैहिस्सलाम आगो लिन जानुभो तथा अल्लाहले उनलाई सन्देशवाहक नियुक्त गरिदियो, जस्तो कि अगाडि भन्यो ।

[3] अर्थात् कुफ्र (इन्कार) अवज्ञा तथा अभिमानमा सीमा नाघिसकेको छ ।

[4] अर्थात् के यस्तो मार्ग तथा आचरणले रुचाउँछौ जसबाट तिम्रो सुधार हुनजाओस् तथा त्यो यो हो कि मुसलमान तथा आज्ञाकारी बनोस् ।

وَأَهْدِيَكَ إِلَىٰ رَبِّكَ فَتَخْشَىٰ ⑲

(१९) तथा यो कि मैले तिमीलाई तिम्रो प्रभुको मार्ग देखाऊँ ताकि तिमी (त्यससित) तर्सन थाल ।[१]

فَأَرَاهُ الْآيَةَ الْكُبْرَىٰ ⑳

(२०) त त्यसलाई ठूलो निशानी देखायो ।[२]

فَكَذَّبَ وَعَصَىٰ ㉑

(२१) त उसले झुठ्लायो तथा अवहेलना गऱ्यो ।[३]

ثُمَّ أَدْبَرَ يَسْعَىٰ ㉒

(२२) अनि फर्क्यो प्रयत्न गर्दै ।[४]

فَحَشَرَ فَنَادَىٰ ㉓

(२३) अनि सबैलाई एकत्रित गरी[५] उच्च स्वरमा पुकाऱ्यो ।

فَقَالَ أَنَا رَبُّكُمُ الْأَعْلَىٰ ㉔

(२४) भने कि तिमी सबैको प्रभु म नै हूँ ।

فَأَخَذَهُ اللَّهُ نَكَالَ الْآخِرَةِ وَالْأُولَىٰ ㉕

(२५) त (सबभन्दा उच्च एवं महान) अल्लाहले पनि त्यसलाई परलोक तथा यस लोकको यातनाहरूमा घेरिहाल्यो ।[६]

---

[१]अर्थात् त्यसको एकता तथा उपासनाको मार्ग ताकि उसित तर्स । किनकि अल्लाहको भय त्यसै हृदयमा संचित हुन्छ जो संमार्गमा हिंड्नेवाला हुन्छ ।

[२]अर्थात् आफ्नो सत्यताका उनले प्रमाण प्रस्तुत गरे जो अल्लाहका तर्फबाट उनलाई प्रदान गरिएका थिए । केही ज्ञाताहरू भन्छन् कि त्यो चमत्कार तात्पर्य हो जो आदरणीय मूसालाई दिएका थिए जस्तै प्रकाशमय हात तथा लठ्ठी तथा केहीका विचारमा नौ निशानीहरू छन् ।

[३]किन्तु यी प्रमाण एवं चमत्कारहरूको त्यसमाथि कुनै प्रभाव भएन तथा झुठ्लाउन एवं अवज्ञाका मार्गमा अग्रसर रह्यो ।

[४]अर्थात् उसले ईमान तथा आज्ञापालनबाट इन्कार मात्र गरेन बरु धर्तीमा उपद्रव फैलाउनुको तथा मूसाको मुकाबिलाको प्रयास गरिरहे । तथा जादूगरहरूलाई एकत्रित गरेर मुसा (अलैहिस्सलाम) सित मुकाबिला (प्रतिस्पर्धा) गरायो ताकि उनलाई झुठा सिद्ध गर्न सकियोस् ।

[५]आफ्ना समुदायलाई अथवा लड्नका लागि आफ्नो सेनालाई अथवा जादूगरहरूलाई मुकाबिलाका लागि एकत्र गऱ्यो तथा दुराग्रहको प्रदर्शन गऱ्यो एवं आफू महाप्रभु हुनुको घोषणा गऱ्यो ।

[६]अर्थात् अल्लाहले त्यसलाई यसरी समात्यो कि संसारमा आगामी उद्दण्डहरूका लागि शिक्षाको प्रतीक बनाइदियो तथा प्रलयको यातना यसमा अधिक छ जो उसलाई त्यहाँ हुनेछ ।

إِنَّ فِي ذَٰلِكَ لَعِبْرَةً لِّمَن يَخْشَىٰ ﴿٢٦﴾

(२६) नि:सन्देह यसमा त्यस व्यक्तिका लागि शिक्षा छ जो तर्सन्छ ।[1]

أَأَنتُمْ أَشَدُّ خَلْقًا أَمِ السَّمَاءُ ۚ بَنَاهَا ﴿٢٧﴾

(२७) के तिम्रो सृष्टि गर्नु कठिन छ अथवा आकाशको ?[2] अल्लाह तआलाले त्यसलाई बनायो ।

رَفَعَ سَمْكَهَا فَسَوَّاهَا ﴿٢٨﴾

(२८) त्यसको उचाई बढायौ अनि त्यसलाई ठीक-ठाक गरिदियो ।[3]

وَأَغْطَشَ لَيْلَهَا وَأَخْرَجَ ضُحَاهَا ﴿٢٩﴾

(२९) तथा त्यसको रात्रिलाई अन्धकारमय तथा त्यसका दिनलाई निकाल्यो ।[4]

وَالْأَرْضَ بَعْدَ ذَٰلِكَ دَحَاهَا ﴿٣٠﴾

(३०) तथा त्यसका पश्चात धर्तीलाई (समतल) ओछ्याइदियो ।[5]

---

यसमा नबी (सल्लल्लाहु अलैहि व सल्लम) का लागि सान्त्वना छ तथा मक्काका काफ़िरहरूलाई चेतावनी छ कि यदि उनले विगत मानिसहरूको घटनाहरूबाट शिक्षा ग्रहण गरेनन् भने उनले अन्त फ़िरऔका समान हुनसक्छन् ।

[2]यो काफ़िरहरूलाई सम्बोधन हो । तथा उद्देश्य भ्रुपार हो कि जो अल्लाह यति विशाल आकाश तथा त्यसको विचित्र वस्तुहरूलाई पैदा गर्नसक्छ त्यसलाई तिमीलाई पुन: जीवित गर्नु कुनचाहिं कठिन कुरो हो ? के तिमीलाई पुन: सृष्टि गर्नु आकाशको रचनाभन्दा अधिक कठिन छ ?

[3]केहीले سَمْك को अर्थ छत पनि गरेका छन् । ठीक-ठाक गर्नुको अभिप्राय त्यसलाई त्यसको आकारमा ढाल्नु हो जसमा कुनै अन्तर, चिरा तथा दोष नरहोस् ।

[4] أَغْطَش को अर्थ हो أَظْلَمَ तथा أَخْرَجَ को अर्थ हो أَبْرَزَ तथा ضُحَاهَا को ठाउँ यसकारण भनियो कि दिन उदाउनुको समय सबभन्दा राम्रो तथा उत्तम हुन्छ । अभिप्राय हो कि सूर्यद्वारा प्रकाशित बनायो ।

[5]यो हा.मीम. अस्सजदा: ९ मा गुज्रिसकेको छ कि خَلَق (पैदा गर्नु) अर्कै कुरा हो तथा دحى (समतल गर्नु) अन्य विषय हो । धर्तीको रचना आकाशभन्दा पहिला भएको हो । किन्तु यसलाई समतल आकाशको रचनाका पश्चात गरिएको हो । तथा यहाँ यसै वास्तविकताको वर्णन छ तथा समतल गर्नु एवं फैलाउनुको अभिप्राय धर्तीलाई सहन योग्य बनाउनका लागि जुन कुराहरूको आवश्यकता छ अल्लाहले तिनको व्यवस्था गऱ्यो जस्तै धर्तीबाट जल निकाल्यो त्यसमा चारा

أَخْرَجَ مِنْهَا مَاءَهَا وَمَرْعَاهَا ﴿٣١﴾

(३१) त्यसबाट पानी तथा चारा (खानेकुरा) निकाल्यो ।

وَالْجِبَالَ أَرْسَاهَا ﴿٣٢﴾

(३२) तथा पर्वतहरूलाई (सुदृढ) रुपले गाड्यो ।

مَتَاعًا لَكُمْ وَلِأَنْعَامِكُمْ ﴿٣٣﴾

(३३) यी सबै तिम्रा तथा तिम्रा जनावरहरूका लाभका लागि छन् ।

فَإِذَا جَاءَتِ الطَّامَّةُ الْكُبْرَىٰ ﴿٣٤﴾

(३४) त जब त्यो ठूलो विपत्ति (केयामत) आउनेछ ।

يَوْمَ يَتَذَكَّرُ الْإِنْسَانُ مَا سَعَىٰ ﴿٣٥﴾

(३५) जुन दिन कि मनुष्य आफूले गरिएका कर्महरूलाई याद गर्नेछ ।

وَبُرِّزَتِ الْجَحِيمُ لِمَنْ يَرَىٰ ﴿٣٦﴾

(३६) तथा (प्रत्येक) देख्नेका समक्ष नरक प्रत्यक्ष गरिदिइनेछ ।[1]

فَأَمَّا مَنْ طَغَىٰ ﴿٣٧﴾

(३७) त जुन (व्यक्ति) ले उद्दण्डता अपनाएको (हुनेछ) ।[2]

وَآثَرَ الْحَيَاةَ الدُّنْيَا ﴿٣٨﴾

(३८) तथा सांसारिक जीवनलाई प्राथमिकता दिएको हुनेछ ।

तथा खाद्य पदार्थ पैदा गऱ्यो । पर्वतहरूलाई किल्लाहरूका समान सुदृढ गाडिदियो ताकि धर्ती नहल्लोस् जस्तो कि यहाँ अगाडि पनि यही वर्णन छ ।

[1]अर्थात् काफ़िरहरूका समान गरिदिइनेछ ताकि उनीहरूले हेरून् कि अब उनको स्थाई निवासस्थान यही नरक़ हो । केही ज्ञाताहरू भन्दछन् कि मोमिन तथा काफ़िर दुवै त्यसलाई देख्नेछन् । मोमिन त्यसलाई देखेर अल्लाह कृतज्ञ हुनेछन् कि उसले ईमान तथा पुण्य कार्यहरूका कारण उनलाई त्यसबाट बचायो । तथा काफ़िर जो पहिला नै भयभीत हुनेछन् त्यसलाई देखेर उनको शोक तथा पछुतो झन् बढ्नेछ ।

[2]कुफ्र (इन्कार) तथा अवज्ञामा सीमा पार गरिसकेको हुनेछ ।

[3]अर्थात् संसारलाई सबथोक भन्ठानेको हुनेछ तथा परलोकका लागि कुनै तयारी गरेको हुनेछैन ।

فَإِنَّ الْجَحِيمَ هِيَ الْمَأْوَىٰ ﴿٣٩﴾

(३९) (त्यसको) स्थान नरक नै हो ।[1]

وَأَمَّا مَنْ خَافَ مَقَامَ رَبِّهِ وَنَهَى النَّفْسَ عَنِ الْهَوَىٰ ﴿٤٠﴾

(४०) परन्तु जो व्यक्ति आफ्ना प्रभुका समक्ष उभिनुबाट[2] तर्सिरहेको हुनेछ तथा आफ्ना मनलाई इच्छाहरूबाट रोकेको हुनेछ ।[3]

فَإِنَّ الْجَنَّةَ هِيَ الْمَأْوَىٰ ﴿٤١﴾

(४१) त त्यसको स्थान स्वर्ग नै छ ।[4]

يَسْأَلُونَكَ عَنِ السَّاعَةِ أَيَّانَ مُرْسَاهَا ﴿٤٢﴾

(४२) मानिस तपाईंसित कयामत (प्रलय) स्थापित हुनुको समय सोध्छन् ।[5]

فِيمَ أَنتَ مِن ذِكْرَاهَا ﴿٤٣﴾

(४३) तपाईंलाई त्यसका वर्णन गर्नुसित के सम्बन्ध ?[6]

إِلَىٰ رَبِّكَ مُنتَهَاهَا ﴿٤٤﴾

(४४) त्यसका (ज्ञानको) अन्ततः तपाईंका प्रभुतिर छ ।

إِنَّمَا أَنتَ مُنذِرُ مَن يَخْشَاهَا ﴿٤٥﴾

(४५) तपाईं त केवल उससित तर्सदै रहनेवालाहरूलाई सावधान गर्नेवाला हुनुहुन्छ ।[7]

---

[1]यसका अतिरिक्त त्यसको कुनै ठेगाना हुनेछैन जहाँ त्यसले त्यसबाट बचेर शरण लेओस् ।

[2]यदि मैले पाप तथा अल्लाहको अवज्ञा गरें भने मलाई अल्लाहबाट बचाउनेवाला कोही हुनेछैन । यसकारण त्यो पापहरूबाट बचिराखेको हुन्छ ।

[3]अर्थात् मनलाई ती पाप तथा निषेधहरूबाट रोकिरहेको हुन्छ जसतिर मनको झुकाव हुन्थ्यो ।

[4]जहाँ त्यो रहनेछ बरु अल्लाहको अतिथि हुनेछ ।

[5]अर्थात् प्रलय कहिले घटित तथा स्थापित हुनेछ जुनप्रकार मौका आफ्नो स्थानमा पुगेर लङ्गर हानिदिन्छ, यसैप्रकार प्रलय घटित हुनुको नियम समय के छ ?

[6]अर्थात् तपाईंलाई यसको निश्चित ज्ञान छैन । यसकारण तपाईंलाई त्यसको वर्णन गर्नुसित के सम्बन्ध ? त्यसको निश्चित ज्ञान त केवल अल्लाहकै पासमा छ ।

[7]अर्थात् तपाईंको काम त केवल إِنْذَار (तर्साउनु) हो, न कि परोक्षका सूचनाहरू दिनु । जसमा कयामतको ज्ञान छ, जो अल्लाहले कसैलाई दिएको छैन । مَن يَخْشَاهَا यसकारण भन्यो कि चेतावनी तथा धर्मका प्रचारबाट लाभ त्यसैलाई

كَأَنَّهُمْ يَوْمَ يَرَوْنَهَا لَمْ يَلْبَثُوٓا إِلَّا عَشِيَّةً أَوْ ضُحَىٰهَا ۝٤٦

(४६) जुन दिन यिनीहरू त्यसलाई देख्नेछन्, त यस्तो प्रतीत हुनेछ कि केवल दिनको अन्तिम भाग अथवा प्रथम भाग नै (संसारमा) रहेका छन् ।[1]

## सूरतु अबस-८०

سُورَةُ عَبَسَ

सूरतु अबस मक्कामा अवतरित भएको तथा यसमा बयालिस आयतहरू तथा एक रुकूअ छन् ।

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

عَبَسَ وَتَوَلَّىٰٓ ۝١

(१) त्यसले मुख बङ्ग्याएर मुख फर्काइहाल्यो ।

أَن جَآءَهُ ٱلْأَعْمَىٰ ۝٢

(२) केवल यसकारण कि त्यसका पासमा एउटा नेत्रहीन आयो ।[2]

---

प्राप्त हुन्छ जसका हृदयमा अल्लाहको भय हुन्छ । अन्यथा तर्साउने तथा सन्देश पुऱ्याउनेको आदेश त प्रत्येकका लागि छ ।

[1]عَشِيَّة जोहरदेखि लिएर सूर्यास्तसम्म तथा ضحى सूर्योदयदेखि दिउँसोसम्मका लागि भनिन्छ । अर्थात् जब काफ़िर नरकको यातना देख्नेछन् त संसारको सुख (आनन्द) तथा तिनका स्वाद सबै बिर्सिहाल्नेछन् तथा उनलाई यस्तो प्रतीत हुनेछ उनी संसारमा पूरा एकदिन पनि रहेनन् । दिन पूर्वाध अथवा परार्ध मात्र नै संसारमा रहेका छन् । अर्थात् उनलाई सांसारिक जीवन यति कम प्राप्त हुनेछ ।

[2]**सूरतु अबस:** यो अवतरण हुनुका कारणमा सबै भाष्यकार सहमत छन् कि यो अब्दुल्लाह पुत्र उम्मे मक्तुमका बारेमा उत्र्यो । एकपटक नबी (सल्लल्लाहु अलैहि वसल्लम) को सेवामा कुरैशका प्रमुखहरू उपस्थित कुरा गरिराखेका थिए कि अकस्मात इब्ने उम्मे मक्तुम जो अन्धा थिए उपस्थित भए तथा नबी (सल्लल्लाहु अलैहि व सल्लम) सित धर्मका कुरा सोध्न लागे, नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले यसलाई नराम्रो मान्नुभयो तथा केही विमुखता देखाउनुभयो । यसकारण चेतावनी स्वरुप यी आयतहरूको अवतरण भयो । (तिर्मिजी सूरतु अबस भए, अल्बानीले यसलाई सहीह भनेका छन्)

وَمَا يُدْرِيكَ لَعَلَّهُ يَزَّكَّىٰٓ ۝٣

(३) तिमीलाई के थाहा शायद त्यो सुधिन्थ्यो ।[१]

أَوْ يَذَّكَّرُ فَتَنفَعَهُ ٱلذِّكْرَىٰٓ ۝٤

(४) अथवा शिक्षाहरू सुन्थ्यो तथा त्यसलाई शिक्षाहरूले लाभ पुऱ्याउँथे ।

أَمَّا مَنِ ٱسْتَغْنَىٰ ۝٥

(५) (परन्तु) जो लापरवाही गर्दछ ।[२]

فَأَنتَ لَهُۥ تَصَدَّىٰ ۝٦

(६) त्यसतिर त तिमी पूर्ण ध्यान दिइराखेका छौ ।[३]

وَمَا عَلَيْكَ أَلَّا يَزَّكَّىٰ ۝٧

(७) यद्यपि कि त्यो नसुधिनुले तिम्रो कुनै हानि छैन ।[४]

وَأَمَّا مَن جَآءَكَ يَسْعَىٰ ۝٨

(८) तथा जो व्यक्ति तिमीतिर दगुर्दै आउँछ ।[५]

وَهُوَ يَخْشَىٰ ۝٩

(९) तथा त्यो तर्सि (पनि) रहेको छ ।[६]

---

[१]इब्ने उम्मे मक्तूमका आगमनबाट नबी (सल्लल्लाहु अलैहि व सल्लम) का अनुहारमा अप्रियताका लक्षण देखिए । यसलाई عَبَسَ सित तथा विमुखतालाई تَوَلَّىٰ सित व्यञ्जित गरियो ।

[२]अर्थात् त्यो नेत्रहीनले तिमीसित धार्मिक निर्देश प्राप्त गरी सदाचार गर्दथ्यो जसबाट त्यसको स्वभाव तथा कर्म बन्थ्यो, त्यसका अन्त:करणको सुधार हुन्थ्यो तथा तिम्रो सदुपदेश सुन्नाले त्यसलाई लाभ हुन्थ्यो ।

[३]ईमान तथा ज्ञानबाट जो तिमीतिर अल्लाहबाट आएको छ अथवा दोस्रो अनुवाद हो जो धनी तथा सम्पन्न छन् ।

[४]तपाईंलाई अधिक ध्यान दिलाइयो कि नि:स्वार्थीहरूलाई छाडेर विमुख मानिसहरूतिर ध्यान दिनु सही कुरो होइन ।

[५]किनकि तिम्रो काम त मात्र सन्देश पुऱ्याउनु हो । अत: यसप्रकार काफ़िरहरूको पछाडि पर्नुको आवश्यकता छैन ।

[६]यस कुराको इच्छुक बनेर कि तिमी त्यस भलाईको मार्ग देखाउ तथा त्यसलाई शिक्षा-दीक्षाबाट सम्मानित गर ।

فَأَنتَ عَنْهُ تَلَهَّىٰ ⑩ (१०) त तिमी त्यससित विमुखता गर्दछौ ।[1]

كَلَّآ إِنَّهَا تَذْكِرَةٌ ⑪ (११) यो उचित छैन[2] (कुर्आन त शिक्षाको) (वस्तु) हो ।

فَمَن شَآءَ ذَكَرَهُۥ ⑫ (१२) जो चाहन्छ त्यसबाट शिक्षा लेओस् ।[3]

فِى صُحُفٍ مُّكَرَّمَةٍ ⑬ (१३) यो त सम्मानित पुस्तकहरूमा छ ।[4]

مَّرْفُوعَةٍ مُّطَهَّرَةٍۭ ⑭ (१४) जो उच्च महान तथा पवित्र एवं शुद्ध छ ।[5]

بِأَيْدِى سَفَرَةٍ ⑮ (१५) यस्ता लेख्नेहरूका हातमा छ ।[6]

---

[1]अर्थात् अल्लाहको भय पनि त्यसका हृदयमा छ । जसका कारण यो आशा छ कि तिम्रा कुरा त्यसका लागि लाभप्रद हुनेछन् तथा त्यसले उनलाई अपनाउनेछ एवं तदानुसार गर्नेछ ।

[2]अर्थात् यस्ता मानिसहरूको त सम्मान बढाउनुका आवश्यकता छ न कि उनीसित विमुखता गर्नुको यस आयतबाट यो कुरो विदित भयो कि आमन्त्रण तथा धर्मका प्रचारमा कसैलाई विशेष गर्नु हुँदैन । बरु धनी-निर्धन, स्वामी-दास, नर-नारी, साना ठूलालाई एकसमान ठानियोस् तथा सबैलाई एकसाथ सम्बोधित गरियोस् । अल्लाहले जसलाई चाहन्छ आफ्नो तत्वदर्शीताले संमार्गबाट सम्मानित गर्दछ ।

[3]अर्थात् गरीबसित यो विमुखता तथा धनवानहरूसित विशेष ध्यान यो उचित छैन । अभिप्राय यो हो कि भविष्यमा पुन: यस्तो नहोस् ।

[4]अर्थात् जो यसमा रुचि राख्दछ तथा यसबाट शिक्षा ग्रहण गर्दछ यसलाई याद गर्दछ तथा यसका माँगहरूमा कार्यरत हुन्छ, तथा जो यसमा ध्यान दिँदैन एवं विमुखता गर्दैन । जस्तै कुरैशका प्रमुख गणले त उनको चिन्ता गर्नुको आवश्यकता छैन ।

[5]अर्थात् (लौहे महफूज़) मा किनकि त्यहींबाट यो कुर्आन उत्रन्छ । अथवा यो तात्पर्य हो कि ती पत्रिकाहरू अल्लाहकहाँ अति सम्मानित छन् । किनकि त्यो ज्ञान तथा तत्वदर्शीताले परिपूर्ण छ ।

[6] مَّرْفُوعَةٍ अल्लाहकहाँ उच्चकोटीको छ । अथवा सन्देहहरू तथा परस्पर प्रतिरोधबाट उच्च छ । مُّطَهَّرَةٍ त्यो अत्यन्त शुद्ध छन् किनकि तिनलाई पवित्र (फरिश्ताहरू) का अतिरिक्त कसैले स्पर्श नै गर्दैन अथवा न्यूनता एवं अधिकताबाट पवित्र छ ।

(१६) जो उच्चकोटी भएको पवित्र छन् । كِرَامٍۭ بَرَرَةٍ ﴿١٦﴾

(१७) अल्लाहको मार मानिस पनि कति कृतघ्न छ ।[1] قُتِلَ الْإِنسَانُ مَا أَكْفَرَهُ ﴿١٧﴾

(१८) त्यसलाई कुन वस्तुले पैदा गऱ्यो । مِنْ أَيِّ شَيْءٍ خَلَقَهُ ﴿١٨﴾

(१९) एक वीर्यबाट पैदा गऱ्यो ।[2] फेरि त्यसलाई अन्दाज (अनुमान) मा राख्यो ।[3] مِن نُّطْفَةٍ خَلَقَهُ فَقَدَّرَهُ ﴿١٩﴾

(२०) अनि त्यसका लागि मार्ग सरल गऱ्यो ।[4] ثُمَّ السَّبِيلَ يَسَّرَهُ ﴿٢٠﴾

(२१) त्यस पश्चात् त्यसलाई मृत्यु दियो अनि चिहानमा गाडिदियो ।[5] ثُمَّ أَمَاتَهُ فَأَقْبَرَهُ ﴿٢١﴾

(२२) अनि जब चाहनेछ त्यसलाई जीवन प्रदान गर्नेछ । ثُمَّ إِذَا شَاءَ أَنشَرَهُ ﴿٢٢﴾

---

[1]यसबाट ती मानिस अभिप्रेत छन् जो बिना तर्क तथा प्रमाण इन्कार गर्दछन् قُتِلَ को अर्थ لُعِنَ तथा مَا أَكْفَرَهُ आश्चर्यवाची रुप छ कति कृतघ्न छ। अगाडि यस कृतघ्न मानिसलाई चिन्तन-विचार को आमन्त्रण दिइराखिएको छ ताकि त्यो आफ्ना कुफ्रबाट रोकियोस् ।

[2]अर्थात् जसको उत्पत्ति यस्तो तुच्छ पानीको थोपाबाट भएको छ । के त्यसलाई कुफ्रबाट रोकिन्छ ।

[3]यसको अभिप्राय यो हो कि त्यसका हितकारी वस्तुहरू त्यसलाई सुलभ गऱ्यो जस्तै दुई हात, दुई खुट्टा तथा दुई आँखा तथा अन्य अङ्ग एवं संवेदनपत्र प्रदान गऱ्यो ।

[4]अर्थात् राम्रो-नराम्रोका मार्ग त्यसका लागि स्पष्ट गरिदियो । केही ज्ञाताहरू भन्छन् कि यसबाट अभिप्राय आमाका गर्भाशयबाट निस्कनुको मार्ग हो । किन्तु प्रथम भावार्थ अधिक उचित छ ।

[5]अर्थात् मृत्युका पश्चात त्यसलाई चिहानहरूमा गाड्नुको आदेश दियो ताकि त्यसको सम्मान स्थित रहोस् अन्यथा जन्तु एवं पखेरु त्यसको शव लुछि-लुछि खान्थे जसबाट त्यसको अपमान हुन्थ्यो ।

كَلَّا لَمَّا يَقْضِ مَآ أَمَرَهُۥ ﴿٢٣﴾

(२३) कदापि होइन,[1] उसले अहिलेसम्म अल्लाहको आज्ञाको पालन गरेन ।

فَلْيَنظُرِ ٱلْإِنسَٰنُ إِلَىٰ طَعَامِهِۦٓ ﴿٢٤﴾

(२४) मानिसलाई आवश्यक छ कि आफ्ना आहारतिर देखोस् ।[2]

أَنَّا صَبَبْنَا ٱلْمَآءَ صَبًّا ﴿٢٥﴾

(२५) कि हामीले निकै पानी वर्षायौं ।

ثُمَّ شَقَقْنَا ٱلْأَرْضَ شَقًّا ﴿٢٦﴾

(२६) अनि धर्तीलाई राम्ररी च्यात्यौं ।

فَأَنۢبَتْنَا فِيهَا حَبًّا ﴿٢٧﴾ وَعِنَبًا وَقَضْبًا ﴿٢٨﴾

(२७-२८) अनि त्यसमा अन्न उब्जायौं तथा अंगूर एवं तरकारी ।

وَزَيْتُونًا وَنَخْلًا ﴿٢٩﴾

(२९) तथा ज़ैतून एवं ख़जूर ।

وَحَدَآئِقَ غُلْبًا ﴿٣٠﴾

(३०) तथा घना बगैंचाहरू ।

وَفَٰكِهَةً وَأَبًّا ﴿٣١﴾

(३१) तथा शुष्क फल एवं (घाँस) चारा[3] पनि

مَّتَٰعًا لَّكُمْ وَلِأَنْعَٰمِكُمْ ﴿٣٢﴾

(३२) तिम्रा प्रयोग तथा लाभका लागि तथा तिम्रा चौपायाहरूका लागि ।

فَإِذَا جَآءَتِ ٱلصَّآخَّةُ ﴿٣٣﴾

(३३) अनि जब कान नसुन्ने गर्ने (प्रलय)[4] आउनेछ ।

يَوْمَ يَفِرُّ ٱلْمَرْءُ مِنْ أَخِيهِ ﴿٣٤﴾

(३४) त मानिस त्यस दिन आफ्ना भाईबाट

وَأُمِّهِۦ وَأَبِيهِ ﴿٣٥﴾

(३५) आफ्नो आमा बाबुबाट

[1] अर्थात् कुरो यस्तो छैन जस्तो काफ़िर भन्दछ ।

[2] कि त्यसलाई अल्लाहले कसरी पैदा गर्‍यो जो त्यसका जीवनका कारण छ तथा कसरी त्यसका लागि जीवन हेतु उपलब्ध गर्‍यो ताकि त्यसले उनीद्वारा परलोकको सौभाग्य प्राप्त गर्न सकोस् ।

[3] أَبًّا त्यो घाँस (चारा) जो स्वयं उम्रन्छ जसलाई पशु खान्छन् ।

[4] केयामत (प्रलय) मा صَآخَّة बहिरा गर्नेवाली यसकारण भनियो कि त्यो एउटा अत्यन्त चित्कारका साथ घटित हुनेछ जसले कानहरूलाई नसुन्ने गराइदिनेछ ।

وَصَاحِبَتِهِۦ وَبَنِيهِ ۝٣٦

(३६) आफ्ना पत्नी तथा सन्तानबाट भाग्नेछन्।

لِكُلِّ ٱمْرِئٍ مِّنْهُمْ يَوْمَئِذٍ شَأْنٌ يُغْنِيهِ ۝٣٧

(३७) उनीहरूमध्ये प्रत्येकलाई त्यस दिन एउटा यस्तो प्रवृत्ति हुनेछ जो त्यसलाई (प्रवृत्त राख्नलाई) पर्याप्त हुनेछ।

وُجُوهٌ يَوْمَئِذٍ مُّسْفِرَةٌ ۝٣٨

(३८) धेरै अनुहारहरू त्यस दिन प्रकाशमान हुनेछन्।[२]

ضَاحِكَةٌ مُّسْتَبْشِرَةٌ ۝٣٩

(३९) (जो) हाँस्दै प्रसन्न हुनेछन्।

وَوُجُوهٌ يَوْمَئِذٍ عَلَيْهَا غَبَرَةٌ ۝٤٠

(४०) तथा धेरै अनुहारहरू त्यस दिन धूलोले ढाकिएका हुनेछन्।

تَرْهَقُهَا قَتَرَةٌ ۝٤١

(४१) उनीमाथि कलिमाले ढाकेको हुनेछ।

أُولَٰٓئِكَ هُمُ ٱلْكَفَرَةُ ٱلْفَجَرَةُ ۝٤٢

(४२) उनी यिनै काफ़िर दूराचारी मानिस हुनेछन्।[४]

---

अथवा आफ्ना समीपवर्ती सम्बन्धी तथा मित्रहरूबाट निस्पृह तथा परवाह नभएको गरिदिनेछ। हदीसमा वर्णित छ कि नबी (सल्लल्लाहु अलैहि वसल्लम) ले भन्नुभयो: कि "सबै मानिस हश्रका मैदानमा नाङ्गा शरीर नाङ्गा खुट्टा पैदल तथा बिना खत्नाका हुनेछन्। हज़रत आयशाले प्रश्न गर्नुभयो, यसप्रकार गुप्ताङ्गहरूमा दृष्टि पर्नेछैन ? उहाँले यसका उत्तरमा यही आयत पढ्नुभयो अर्थात् ﴿لِكُلِّ ٱمْرِئٍ مِّنْهُمْ﴾ संक्षिप्त आयत (तिर्मिजी तफ़सीर सूरते अबस, नसाई किताबुल जनायेज़, बाबुल बास) यसको कारण केहीको विचारले यो हो कि मानिस आफ्नो घरहरूबाट यसकारण भाग्नेछ ताकि त्यसले त्यसको त्यो दु:ख तथा कष्ट नदेखोस् जसमा त्यो ग्रस्त हुनेछ। केही ज्ञाताहरू भन्दछन् यसकारण कि उनलाई ज्ञान हुनेछ कि उनी कसैलाई लाभ पुर्‍याउन सक्दैनन् तथा उनका केही काम आउन सक्दैनन् (फ़तहुल क़दीर)

[२]यी ईमान भएका अनुहाररू हुनेछन् जसलाई उनका कर्मपत्र उनका दाहिने हातमा दिइनेछन्। जसबाट उनलाई आफ्ना पारलौकिक सौभाग्य तथा सफलताको विश्वास हुनेछ जसबाट उनका अनुहारहरू प्रफुल्लताले टल्किराखेका हुनेछन्।

[३]अर्थात् अपमान तथा यातनाका अवलोकनबाट उनका अनुहार मलिला, पहेंला तथा काला हुनेछन् जस्तो शोकग्रस्त तथा चिन्तित मानिसहरूको अनुहार हुन्छ।

[४]अर्थात् अल्लाहको, रसूलको, क़यामतको इन्कार गर्नेवाला थिए, तथा दुराचारी तथा दुष्चरित्र पनि।

## सूरतुत तक्वीर ८१

سُورَةُ التَّكْوِيرِ

सूरतुत तक्वीर मक्कामा अवतरित भएको तथा यसका उनान्तिस आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

إِذَا الشَّمْسُ كُوِّرَتْ ۝١

(१) जब सूर्य बेरिनेछ ।[1]

وَإِذَا النُّجُومُ انكَدَرَتْ ۝٢

(२) तथा जब ताराहरू प्रकाशविहीन हुन जानेछन् ।[2]

وَإِذَا الْجِبَالُ سُيِّرَتْ ۝٣

(३) तथा जब पर्वत चलाइनेछन् ।[3]

وَإِذَا الْعِشَارُ عُطِّلَتْ ۝٤

(४) तथा जब गर्भवती ऊटनीहरू छाड्दिइनेछन् ।[4]

---

**सूरतुत तक्वीरः** यस सूरःमा विशेषरूपले केयामतको चित्रण गरिएको छ । यसैकारण रसूलुल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) को कथन छ, कि जो व्यक्ति चाहन्छ कि केयामतलाई यसप्रकार हेरोस् जस्तो आँखाले देखिन्छ त त्यसलाई आवश्यक छ कि त्यसले ﴿إِذَا الشَّمْسُ كُوِّرَتْ﴾ तथा ﴿إِذَا السَّمَاءُ انفَطَرَتْ﴾ ध्यानसित पढोस् । (तिर्मिज़ी तफ़सीर सूरतित तक्वीर मुसनद अहमद २/२७, ३६, १०० अल्बानीले यसलाई "सहीहा" मा वर्णन गरेका छन्......)

[1]अर्थात् जुन प्रकार टाउकोमा फेटा बेरिन्छ, त्यसप्रकार सूर्यलाई बेरिनेछ । जसका कारण त्यसको प्रकाश स्वयं समाप्त हुनेछ । हदीसमा छ । «الشَّمْسُ وَالْقَمَرُ مُكَوَّرَانِ يَوْمَ الْقِيَامَةِ» "केयामतका दिन चन्द्र र सूर्यलाई प्रकाशविहीन गरिदिइनेछ ।" (सहीह बुख़ारी वदअल ख़ल्क़) केही हदीसबाट लाग्दछ कि उनलाई बेरेर नरकमा फ्याँकिदिइनेछ ताकि जो मिश्रणवादी उनको पूजा गर्दथे अधिक निरादर तथा अपमानित होऊन् । (फ़तहुल बारी, उपरोक्त बाब)

[2]दोस्रो अनुवाद हो झरेर खस्नेछन् अर्थात् आकाशमा उनको अस्तित्व नै रहने छैन ।

[3]अर्थात उनलाई धर्तीबाट उखेलेर अन्तरिक्षमा पठाइनेछ तथा उनी थुनिएका कपासका समान पुरिनेछन् ।

[4]عِشَارٌ बहुवचन हो عُشَرَاءُ को गर्भवती ऊटनीहरू जब उनको गर्भ दस महीनाको हुनजान्छ त अरबहरूमा यो अति मूल्यवान मानिन्थ्यो । जब प्रलय व्याप्त हुनेछ

(५) तथा जब वनप्राणी एकत्रित गरिनेछन् ।[१] وَإِذَا الْوُحُوشُ حُشِرَتْ ۝٥

(६) तथा जब समुद्र उत्तेजित गरिनेछन् ।[२] وَإِذَا الْبِحَارُ سُجِّرَتْ ۝٦

(७) तथा जब प्राणहरू एक आपसमा मिलाइनेछन् ।[३] وَإِذَا النُّفُوسُ زُوِّجَتْ ۝٧

(८) तथा जब जीवित गाडिएका केटीहरूसँग प्रश्न गरिनेछ । وَإِذَا الْمَوْءُودَةُ سُئِلَتْ ۝٨

(९) कि कुन पापका कारण उनको हत्या गरियो ।[४] بِأَيِّ ذَنْبٍ قُتِلَتْ ۝٩

(१०) तथा जब कर्मपत्र खोलिनेछन् ।[५] وَإِذَا الصُّحُفُ نُشِرَتْ ۝١٠

(११) तथा जब आकाशको छाला तानिनेछ (हालिनेछ) ।[६] وَإِذَا السَّمَاءُ كُشِطَتْ ۝١١

(१२) तथा जब नरक भड्काइने (आक्रोशित) छ । وَإِذَا الْجَحِيمُ سُعِّرَتْ ۝١٢

---

त यस्तो भयावह दृश्य हुनेछ कि यदि कसैका पासमा यसप्रकारका मूल्यवान ऊटनीहरू हुनेछन् त उनलाई पनि छाड्दिनेछ तथा उनको वास्ता गर्नेछैन ।

[१]अर्थात् उनलाई प्रलयका दिन एकत्रित गरिनेछ ।

[२]अर्थात् अल्लाहको आज्ञाले आगो प्रज्वलित हुनेछ ।

[३]यसका कैयन भावार्थ गरिएका छन् । अधिक उचित यो लाग्दछ कि प्रत्येक व्यक्तिलाई त्यसका सहमत तथा सहधर्मीका साथ मिलाइदिइनेछ । ईमान भएकाहरूलाई ईमानवालाहरूका साथ नराम्राहरूलाई नराम्राका साथ, यहूदीहरूलाई यहूदीहरूका साथ, ईसाइहरूलाई ईसाइहरूका साथ । तथा यसैअनुसार ।

[४]यसप्रकार हत्यारालाई धिक्कारिनेछ, किनकि वास्तवमा अपराधी त त्यही हुनेछ । न कि مَوْءُودَة (जीवित समाधि दिएकी बालिका) जससित प्रत्यक्षरुपले प्रश्न गरिनेछ ।

[५]मृत्युका समय यी कर्मपत्र बेरिन्छन् । अनि प्रलयका दिन हिसाबका लागि खोल्दिइने छन् । जसलाई प्रत्येक व्यक्तिले देख्नेछ बरु हातहरूमा पकडाइनेछन् ।

[६]अर्थात् उनी यसप्रकार उदार्नेछन् जस्तै छत उदारिनेछ ।

وَإِذَا الْجَنَّةُ أُزْلِفَتْ ﴿١٣﴾

(१३) तथा जब स्वर्ग निकट गरिनेछ ।

عَلِمَتْ نَفْسٌ مَّا أَحْضَرَتْ ﴿١٤﴾

(१४) त त्यस दिन प्रत्येक व्यक्तिले यो जान्नेछ जे-जति लिएर आएको हुनेछ ।[1]

فَلَا أُقْسِمُ بِالْخُنَّسِ ﴿١٥﴾

(१५) म सौगन्ध खान्छु पछि हट्नेवाला ।

الْجَوَارِ الْكُنَّسِ ﴿١٦﴾

(१६) हिंड्डुल गर्नेवाला लुक्नेवाला ताराहरूको ।[2]

وَاللَّيْلِ إِذَا عَسْعَسَ ﴿١٧﴾

(१७) तथा रात्रि कि जब जानथाल्छ ।[3]

وَالصُّبْحِ إِذَا تَنَفَّسَ ﴿١٨﴾

(१८) तथा प्रातः कि जब चम्कन थाल्छ ।[4]

إِنَّهُ لَقَوْلُ رَسُولٍ كَرِيمٍ ﴿١٩﴾

(१९) निःसन्देह यो एउटा महान सन्देष्टाको कथन हो ।[5]

---

[1]यो उत्तर हो अर्थात् जब उपरोक्त विषय प्रकाशमा आउनेछन् जसमध्ये प्रथम छ को सम्बन्ध संसारसित छ तथा अर्को छ को परलोकसित त्यस समय प्रत्येकका अगाडि त्यसको वास्तविकता आउनेछ ।

[2]यसबाट अभिप्राय ताराहरू हुन् خُنَّس यो خَنَس बाट छ । जसको अर्थ पछि हट्नु हो । यी ताराहरू दिनका समय पछाडि हटेर जान्छन्, तथा देखिंदैनन् । तथा यी शनिग्रह, वृहस्पति, मंगलग्रह, शुक्रग्रह, बुद्धग्रह हुन् । यिनी विशेषरुपले सूर्यको दिशामा हुन्छन् । केही विदहरू भन्छन् कि सबै ग्रहहरू अभिप्राय हुन् किनकि सबै आफ्ना लुक्ने ठाउँमा लुक्दछन् अथवा दिनमा लुकेर रहन्छन् । الْجَوَارِ चल्नेवाला, الْجَوَارِ लुक्नेवाला, जस्तै हरिण आफ्ना स्थानमा लुक्छन् ।

[3] عَسْعَس को दुवै अर्थ छ आउनु तथा जानु । यो यी दुबै अर्थहरूमा प्रयुक्त हुन्छ । तैपनि यहाँ जानुका अर्थमा छ ।

[4]अर्थात् त्यसको उदय हुनजाओस् अथवा फाटेर निस्कोस् ।

[5]यसकारण कि त्यो अल्लाहको तर्फबाट लिएर आएको छ । तात्पर्य माननीय जिब्रील हुन् ।

ذِيْ قُوَّةٍ عِنْدَ ذِي الْعَرْشِ مَكِيْنٍ ﴿٢٠﴾

(२०) जो शक्तिशाली छ[1] अर्शवाला (अल्लाह) का निकट सम्मानित छ ।

مُّطَاعٍ ثَمَّ أَمِيْنٍ ﴿٢١﴾

(२१) जसको त्यहाँ (आकाशहरूमा आज्ञाको) पालन गरिन्छ (त्यो) न्यासिक छ ।[2]

وَمَا صَاحِبُكُمْ بِمَجْنُوْنٍ ﴿٢٢﴾

(२२) तथा तिम्रो साथी दीवाना छैन ।[3]

وَلَقَدْ رَاٰهُ بِالْاُفُقِ الْمُبِيْنِ ﴿٢٣﴾

(२३) उसले त्यस (फरिश्ता) लाई आकाशका खुला किनारामा देखेको पनि छ ।[4]

وَمَا هُوَ عَلَى الْغَيْبِ بِضَنِيْنٍ ﴿٢٤﴾

(२४) तथा यो परोक्षका कुरा बताउनमा कंजूस पनि छैन ।[5]

---

[1]अर्थात् जुन काम त्यसलाई सुम्पिन्छ पूरा शक्तिले गर्दछ ।

[2]अर्थात् फरिश्ताहरूका बीच त्यसको आज्ञाको पालन गरिन्छ त्यो फरिश्ताहरूको परिश्रय तथा अनुसरणीय छ तथा प्रकाशनाका सन्दर्भमा न्यायिक छ ।

[3]यो सम्बोधन मक्कावासीहरूलाई छ तथा साथीसित अभिप्राय रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) हुन् अर्थात् जे तिमी सोच्दछौ कि तिम्रो सगोत्र सम देशी एवं साथी मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) نَعُوْذُ بِاللهِ दीवाना छ त यस्तो छैन, अलि कुर्आन पढेर त हेर के कुनै पागल यस्तो ज्ञान तथा यथार्थताको वर्णन गर्न सक्दछ तथा विगत समुदायहरूको सही-सही स्थिति बताउन सक्छ जो यस कुर्आनमा वर्णित गरिएका छन् ।

[4]यो पहिला गुज्रिसकेको छ कि रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) ले माननीय जिब्रीललाई दुई पटक उनका मूल रुपमा देख्नु भएको छ । जसमध्ये एउटाको चर्चा यहाँ छ । यो नबूअतका आरम्भिक समयको घटना हो । त्यस समय जिब्रीलका छ सय पखेटा थिए, जसले आकाशका किनाराहरू (क्षितिज) लाई भरिदिए दोस्रो पटक 'मेराजका' अवसरमा देख्नुभयो । जस्तो कि सूरतुल नज्ममा विवरण गुज्रिसके ।

[5]यो नबी (सल्लल्लाहु अलैहि व सल्लम) का सन्दर्भमा स्पष्ट गरिंदैछ कि तपाईंलाई जुन कुराहरूको सूचना दिइन्छ । जुन आज्ञा तथा कर्तव्य तपाईंलाई बताइन्छन् यिनीहरूमध्ये कुनै कुरा तपाईं आफ्नो पासमा राख्नुहुन्न, बरु सन्देश पुर्‍याउनका दायित्वको संबेदन गर्दै प्रत्येक तथा आदेश मानिसहरूलाई पुर्‍याइदिनु हुन्छ ।

وَمَا هُوَ بِقَوْلِ شَيْطَٰنٍ رَّجِيمٍ ﴿٢٥﴾

(२५) तथा यो (कुर्आन) धिक्कृत शैतानको कथन होइन ।[1]

فَأَيْنَ تَذْهَبُونَ ﴿٢٦﴾

(२६) अनि तिमी कता गइराखेका छौ ?[2]

إِنْ هُوَ إِلَّا ذِكْرٌ لِّلْعَٰلَمِينَ ﴿٢٧﴾

(२७) यो त समस्त जगत्वालाहरूका लागि शिक्षापत्र हो ।

لِمَن شَآءَ مِنكُمْ أَن يَسْتَقِيمَ ﴿٢٨﴾

(२८) (विशेषरुपले त्यसका लागि) जो तिमीमध्ये सोझो मार्गमा हिंड्न चाहन्छ ।

وَمَا تَشَآءُونَ إِلَّآ أَن يَشَآءَ ٱللَّهُ رَبُّ ٱلْعَٰلَمِينَ ﴿٢٩﴾

(२९) तथा तिमी समस्त जगत्का प्रभुले चाहे बिना केही पनि चाहन सक्दैनौ ।[3]

## सूरतुल इंफ़ितार ८२

سُورَةُ الانْفِطَارِ

सूरतुल इफ़ितार मक्कामा अवतरित भएको तथा यसमा उन्नाईस आयतहरू छन् ।

إِذَا ٱلسَّمَآءُ ٱنفَطَرَتْ ﴿١﴾

(१) जब आकाश च्यातिनेछ ।[4]

وَإِذَا ٱلْكَوَاكِبُ ٱنتَثَرَتْ ﴿٢﴾

(२) तथा जब ताराहरू खस्नेछन् ।

---

[1]जुनप्रकार ज्योतिषिहरूका पासमा शैतान आउँछन् तथा केही लुकिछिपी कुरा अँधुरो रुपमा उनलाई बताउँछन् । कुर्आन यस्तो छैन ।

[2]अर्थात् किन यसबाट विमुख हुन्छौ ? तथा त्यसको आज्ञाको पालन गर्दैनौ ?

[3]अर्थात् तिम्रो चाहत अल्लाहको दयामा निर्भर जबसम्म तिम्रो चाहतका साथ अल्लाहको इच्छा तथा दया पनि सम्मिलित हुँदैन त्यस समयसम्म तिमी सोझो मार्ग अपनाउन सक्दैनौ । यो त्यही विषय हो जो आयत ﴿إِنَّكَ لَا تَهْدِي مَنْ أَحْبَبْتَ﴾ आदिमा वर्णन भएको छ ।

[4]**सूरतुल इंफितार :** अर्थात् अल्लाहको आज्ञा तथा भयले च्यातिनेछ तथा फरिश्ताहरू तल झर्नेछन् ।

وَإِذَا الْبِحَارُ فُجِّرَتْ ۝٣

(३) तथा जब समुद्र बगेर जानेछन् ।[1]

وَإِذَا الْقُبُورُ بُعْثِرَتْ ۝٤

(४) तथा जब चिहानहरू (च्यातिएर) उखेलिनेछन् ।[2]

عَلِمَتْ نَفْسٌ مَّا قَدَّمَتْ وَأَخَّرَتْ ۝٥

(५) त्यस समय प्रत्येक व्यक्ति आफ्नो अगाडि पठाएको तथा पछाडि छाडेको (अर्थात् अघिल्ला-पछिल्ला कर्महरूलाई) जान्नेछ ।[3]

يَٰٓأَيُّهَا الْإِنسَانُ مَا غَرَّكَ بِرَبِّكَ الْكَرِيمِ ۝٦

(६) हे मनुष्य ! तिमीलाई आफ्ना दयालु प्रभुबाट कुन कुराले बहकायो ?[4]

الَّذِي خَلَقَكَ فَسَوَّاكَ فَعَدَلَكَ ۝٧

(७) जुन (प्रभुले) तिमीलाई पैदा गऱ्यो[5] अनि

---

[1]तथा सबैका जल एकै समुद्रमा एकत्रित हुनेछन् अनि अल्लाहले पश्चिमी वायु पठाउनेछ । जो यसमा आगोमा प्रज्वलित गरिदिनेछ । जसबाट आकाशसम्म विस्फोटक ज्वाला उठ्नेछन् ।

[2]अर्थात् समाधिहरूबाट मुर्दा जीवित भई बाहिर निस्केर आउनेछन् بُعْثِرَتْ उखालिदिनेछन् अथवा उनको माटो पल्टाइदिनेछ ।

[3]अर्थात् जब उपरोक्त कुरा घटित हुनेछन् त मानिसलाई आफूले गरिएका क्रियाकलापको ज्ञान हुन जानेछ । जे पनि सत्कर्म अथवा कुकर्म उसले गरेको हुनेछ त्यो अगाडि आउनेछ पछाडि छाडिएका कर्मसित अभिप्राय आफ्ना पछाडि आफ्ना कर्म तथा कर्तुतका राम्रा अथवा नराम्रा नमूना छन् । जो संसारमा त्यसले छाडेर जानेछ । तथा मानिस त्यसमा कार्यरत छन् । यी नमूना यदि राम्रा छन् भने त्यसका मृत पश्चात जो पनि उनका नमूनामा काम गर्नेछन् । त्यो पुण्य त्यसलाई प्राप्त भइरहनेछ । तथा यदि नराम्रा नमूना आफ्ना पछाडि छाडेर गएको छ त जसले पनि त्यसलाई अपनाउनेछ तिनका पाप पनि अथवा कार्य प्रचलित भएको छ ।

[4]अर्थात् कुन कुराले तिमीलाई धोकामा पारेको छ कि तिमीले आफ्ना प्रभुका साथ कुफ्र गऱ्यौ जसले तिमीलाई अस्तित्व प्रदान गऱ्यो, तिमीलाई समझ-वृद्धि दियो तथा जीवन हेतु तिम्रा लागि तयार गऱ्यो ।

[5]अर्थात् तुच्छ वीर्यबाट जबकि त्यसभन्दा पहिला तिम्रो अस्तित्व थिएन ।

ठीक-ठाक पार्‍यो[1] अनि (उचित रुपले) बराबर बनायो।[2]

فِيٓ أَيِّ صُورَةٖ مَّا شَآءَ رَكَّبَكَ ۝٨

(८) जुन रुपमा चाहयो तिमीलाई बनायो तथा तिमीलाई ढाल्यो।[3]

كَلَّا بَلۡ تُكَذِّبُونَ بِٱلدِّينِ ۝٩

(९) कदापि होइन, अपितु तिमी त दण्ड तथा प्रतिफलका दिनलाई झुठ्लाउँछौ।[4]

وَإِنَّ عَلَيۡكُمۡ لَحَٰفِظِينَ ۝١٠

(१०) नि:सन्देह तिम्रा लागि रक्षक उच्चकोटीका।

كِرَامٗا كَٰتِبِينَ ۝١١

(११) लेख्नेहरू निर्धारित (नियुक्त) छन्।

يَعۡلَمُونَ مَا تَفۡعَلُونَ ۝١٢

(१२) जे-जति गर्दछौ, उनीहरू जान्दछन्।[5]

---

[1]अर्थात् तिमीलाई पूर्ण मानिस बनाइदियो। तिमी देख्छौ, सुन्दछौ, समझ-बुझ राख्दछौ।

[2]तिमीलाई सन्तुलित, खडा तथा सुन्दर बनायो अथवा तिम्रा दुवै हात तथा खुट्टा एवं आँखा कानहरूलाई बराबर बनायो। यदि तिम्रा अङ्गहरूमा यो समानता एवं अनुकूलता नभएको भए तिम्रो अस्तित्व असन्तुलित हुन्थ्यो। यसै रचनालाई अन्य स्थानमा सित व्याञ्जित गरेको छ। ﴿لَقَدۡ خَلَقۡنَا ٱلۡإِنسَٰنَ فِيٓ أَحۡسَنِ تَقۡوِيمٖ﴾ أَحۡسَنِ تَقۡوِيمٖ|

[3]यसको एउटा भावार्थ त यो हो अल्लाह बच्चाहरूलाई जसको समान चाहन्छ गर्दछ। पिताका, माताका अथवा मामु वा काकाका समान। दोस्रो अर्थ हो त्यो जुन रुपमा चाहन्छ ढालिदिन्छ यहाँसम्मकि कुरुप जन्तुका समरुप पैदा गर्नसक्छ। किन्तु यो त्यसको अनुग्रह तथा दया एवं कृपा हो कि त्यसले यस्तो गर्दैन तथा उत्तम माननीय रुपमा नै पैदा गर्दछ।

[4] كَلَّا यो حَقًّا का अर्थमा पनि हुनसक्छ। तथा काफ़िरहरूका त्यस आचरणको इन्कार पनि जो अल्लाहको दया तथा कृपाले धोकामा लीन हुनुमा आधारित छ। अर्थात् यस अभिमानमा ग्रस्त रहनुको कुनै औचित्य छैन बरु मूल विषय यो हो कि तिम्रा हृदयमा त्यस कुरामा विश्वास छैन कि प्रलय हुनेछ तथा त्यहाँ राम्रो, नराम्रोको प्रतिकार (प्रतिफल पाइनेछ)

[5]अर्थात् तिमी प्रतिफल तथा दण्डको इन्कार गर्दछौ किन्तु तिमीलाई थाहा हुनुपर्छ कि तिम्रो प्रत्येक कर्म तथा कथन अंकित गरिंदैछ। अल्लाहको तर्फबाट फरिश्ताहरू तिमीमाथि निरीक्षकका रुपमा नियुक्त छन् जो तिम्रो प्रत्येक त्यस कुरालाई जान्दछन् जो

إِنَّ الْأَبْرَارَ لَفِي نَعِيمٍ ﴿١٣﴾

(१३) निःसन्देह सदाचारीहरू (स्वर्गका सुख सुविधाहरू तथा) उपलब्धिहरूबाट लाभान्वित हुनेछन् ।

وَإِنَّ الْفُجَّارَ لَفِي جَحِيمٍ ﴿١٤﴾

(१४) तथा निश्चित रुपले कुकर्मीहरू नरकमा हुनेछन् ।[1]

يَصْلَوْنَهَا يَوْمَ الدِّينِ ﴿١٥﴾

(१५) प्रतिफलका दिन त्यसमा जानेछन् ।[2]

وَمَا هُمْ عَنْهَا بِغَائِبِينَ ﴿١٦﴾

(१६) उनीहरू त्यसबाट कहिल्यै अनुपस्थित हुन पाउने छैनन् ।[3]

وَمَا أَدْرَاكَ مَا يَوْمُ الدِّينِ ﴿١٧﴾

(१७) तिमीलाई केही थाहा पनि छ कि प्रतिफलको दिन के हो ?

---

तिमी गर्दछौ मानौ यो मानिसलाई चेतावनी छ कि प्रत्येक कथन कर्म तथा कथनभन्दा पहिला तिमी विचार गरिहाल । यो त्यही कुरा हो जो पहिला गुज्रिसकेको छ जस्तै

﴿إِذْ يَتَلَقَّى الْمُتَلَقِّيَانِ عَنِ الْيَمِينِ وَعَنِ الشِّمَالِ قَعِيدٌ ۞ مَا يَلْفِظُ مِن قَوْلٍ إِلَّا لَدَيْهِ رَقِيبٌ عَتِيدٌ﴾

अर्थात् एउटा फरिश्ता दायाँ तथा दोस्रो त्यसका बायाँ बसेको छ । मनुष्य जो बोल्दछ, त्यसका पास निरीक्षक तयार तथा उपस्थित छ । (सूरतु काफ़-१७, १८) अर्थात् लेख्नका लागि भन्दछन् कि एउटा फरिश्ता सत्कर्म तथा दोस्रो कुकर्म लेख्दछ । तथा हदीस एवं रिवायतहरूबाट विदित हुन्छ कि दिनका लागि दुई फरिश्ता अलग तथा रातका लागि दुई फरिश्ता अलग छन् । अगाडि राम्रा तथा नराम्रा दुईटैको चर्चा गरिदैछ ।

[1]जस्तै (अश्शूरा-७) मा भन्यो:

﴿فَرِيقٌ فِي الْجَنَّةِ وَفَرِيقٌ فِي السَّعِيرِ﴾

[2]अर्थात् जुन पुण्य तथा दण्डका दिनको उनीहरूले इन्कार गरिराखेका थिए, त्यसै नरकमा आफ्ना कर्महरूका प्रतिफल स्वरुप प्रविष्ट हुनेछन् ।

[3]अर्थात् कहिल्यै त्यसबाट अलग हुनेछैनन् तथा त्यसबाट अनुपस्थित हुने छैनन् । बरु सधैं त्यसैमा रहनेछन् ।

ثُمَّ مَآ أَدْرَىٰكَ مَا يَوْمُ ٱلدِّينِ ﴿١٨﴾

(१८) म पुनः (भन्दछु कि) तिमीलाई के थाहा कि प्रतिफल तथा दण्डको दिन के हो ।[1]

يَوْمَ لَا تَمْلِكُ نَفْسٌ لِّنَفْسٍ شَيْـًٔا ۖ وَٱلْأَمْرُ يَوْمَئِذٍ لِّلَّهِ ﴿١٩﴾

(१९) (त्यो हो) जुन दिन कुनै व्यक्तिका लागि कुनै कुराको अधिकारी हुनेछैन, तथा समस्त आदेश त्यसदिन अल्लाहकै हुनेछ ।[2]

## سُورَةُ المُطَفِّفِينَ

## सूरतुल मुतफ़्फ़ेफ़ीन-८३

सूरतुल मुतफ़्फ़ेफ़ीन मक्कामा अवतरित भयो तथा यसमा छत्तीस आयत छन् ।

[1]पुनरावृत्ति त्यसको महानता तथा त्यस दिनको भयानकतालाई स्पष्ट गर्नको लागि छ ।

[2]अर्थात् संसारमा त अल्लाहले सामयिक रुपले मानिसहरूलाई केही घटी तथा केही बढी अधिकारका अन्तरका साथ राखेको छ । किन्तु प्रलयका दिन सबै अधिकार पूर्णतः अल्लाहसित हुनेछन् । जस्तै (सूरतुल मोमिन-१६) मा भन्यो :

﴿لِّمَنِ ٱلْمُلْكُ ٱلْيَوْمَ ۖ لِلَّهِ ٱلْوَٰحِدِ ٱلْقَهَّارِ﴾

"आजको दिन कसको शासन छ ?"

यसैप्रकार नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले आफ्नी फूफी सफीया तथा पुत्री फ़ातिमालाई भन्दिनु भएको थियो ।

«لَا أَملِكُ لَكُمْ مِنَ اللهِ شَيئًا»

"अल्लाह छेउ म कुनै कुराको मालिक हुनेछैन ।" (सहीह मुस्लिम, किताबुल ईमान)

तथा बनू हाशिम एवं बनू अब्दुल मुत्तलिबलाई पनि भन्नुभयो ।

«أَنْقِذُوا أَنْفُسَكُم مِنَ النَّارِ وَاللهِ لَا أَملِكُ لَكُمْ مِنَ اللهِ شَيئًا»

"आफूलाई नरकको आगोबाट बचाउ । अल्लाहको सौगन्ध म अल्लाह छेउ कुनै कुराको मालिक हुनेछैन ।" मुस्लिम उपरोक्त किताब, बुख़ारी, सूरतुश्शुअरा)

**सूरतुल मुतफ़्फ़ेफ़ीनः** केही मानिस यसलाई मक्की तथा केही मदनी भन्दछन् केहीका विचारमा मक्का तथा मदीनाका बीच अवतरित भयो । यसका अवतरणका विषयमा यो रिवायत छ कि जब नबी (सल्लल्लाहु अलैहि व सल्लम) मदीनामा आउनुभयो त मदीनाका मानिस नाप तौलमा अति नराम्रा मानिस थिए अतः अल्लाहले यो सूरत अवतरित गऱ्यो, जसका पश्चात उनले आफ्ना नाप-तौल सुधारे (इब्ने माजासँग व्यापार, नाप तथा तौलमा पूरा दिनुको अध्याय)

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु तथा अत्यन्त कृपालु छ ।

وَيۡلٞ لِّلۡمُطَفِّفِينَ ١

(१) ठूलो दु:ख छ नाप-तौलमा कमी गर्नेहरूका लागि ।

ٱلَّذِينَ إِذَا ٱكۡتَالُواْ عَلَى ٱلنَّاسِ يَسۡتَوۡفُونَ ٢

(२) कि जब मानिसहरूसित नाप गर्दछन्, त पूरा-पूरा लिन्छन् ।

وَإِذَا كَالُوهُمۡ أَو وَّزَنُوهُمۡ يُخۡسِرُونَ ٣

(३) तथा जब उनीहरूलाई नापेर अथवा तौलेर दिन्छन् त कम दिन्छन् ।

أَلَا يَظُنُّ أُوْلَٰٓئِكَ أَنَّهُم مَّبۡعُوثُونَ ٤

(४) के उनीहरूलाई आफू मर्नुका पश्चात जीवित भई उठ्ने कुरोमा विश्वास छैन ।

لِيَوۡمٍ عَظِيمٖ ٥

(५) त्यस अत्यन्त ठूला दिनका लागि ।

يَوۡمَ يَقُومُ ٱلنَّاسُ لِرَبِّ ٱلۡعَٰلَمِينَ ٦

(६) जुन दिन सबै मानिस समस्त जगत्का प्रभुका सामु उभिनेछन् ।[२]

---

[१]अर्थात् लेनदेनका अगल-अलग नाप राख्नु । यसैप्रकार डाँणी मारेर नाप तथा तौलमा कमी गर्नु निकै गम्भीर नैतिक अपराध हो । जसको प्रभाव धर्म तथा परलोकमा विनाश छ । एउटा हदीसमा छ "जुन समुदायले नाप-तौलमा कमी गर्दछ त्यसमाथि अकाल कडा परिश्रम तथा शासकहरूको अत्याचार आच्छादित गरिदिइन्छ ।" (इब्ने माजा नम्बर ४०१९) यसलाई अल्बानीले अस्सहीहा: मा वर्णन गर्नुभएको छ । (नम्बर १०६)

[२]यी डाँणीमा यस कुरासित तर्सन्नन् कि एउटा बडो भयानक दिन आउनेवाला छ जसमा सबै मानिस सर्वलोकका पालनकर्ताका अगाडि उभिनेछन् जो सबै गुप्त कुरावाट अवगत छ ? अथवा अभिप्राय यो हो कि यो काम तिनै मानिसले गर्दछन् जसका हृदयमा अल्लाहको भय तथा प्रलयको डर छैन । हदीसहरूमा वर्णित छ कि जुन समय अल्लाह त्रिलोकका प्रभुका अगाडि उभिनेछन् त पसिना मानिसहरूका आधा कानहरूसम्म पुगेगा हुनेछ । (बुख़ारी व्याख्या सूरतुल मुतफ़्फ़ेफ़ीन) एउटा अन्य रिवायतमा छ कि प्रलयका दिन सूर्य सृष्टिका यति निकट हुनेछ कि एक मीलको मात्राभन्दा पनि कम हुनेछ । (हदीसका रावी श्री सुलैम पुत्र आमिर भन्नुहुन्छ मलाई थाहा छैन कि उहाँले मीलबाट धर्ती नाप्नुको मील तात्पर्य लिनुभएको छ अथवा त्यो सलाई जसबाट आँखामा सुरमा हालिन्छ अत: मानिस आफ्ना कर्महरूका अनुसार पसिनामा हुनेछन् यो पसिना कसैको कुर्कुच्चासम्म कसैका घुंडासम्म कसैको कम्मरसम्म हुनेछ तथा कसैका लागि यो लगाम

كَلَّآ اِنَّ كِتٰبَ الْفُجَّارِ لَفِيْ سِجِّيْنٍ ۝٧

(७) निःसन्देह कुकर्मीहरूको कर्मपत्र सिज्जीनमा छ ।[1]

وَمَآ اَدْرٰىكَ مَا سِجِّيْنٌ ۝٨

(८) तिमीलाई के थाहा कि सिज्जीन के हो ?

كِتٰبٌ مَّرْقُوْمٌ ۝٩

(९) (यो त) लेखिएको किताब हो ।

وَيْلٌ يَّوْمَىِٕذٍ لِّلْمُكَذِّبِيْنَ ۝١٠

(१०) त्यस दिन झुठ्लाउनेहरूको बडो दुर्गति छ ।

الَّذِيْنَ يُكَذِّبُوْنَ بِيَوْمِ الدِّيْنِ ۝١١

(११) जो प्रतिफल एवं दण्डका दिनलाई झुठ्लाउँदै रहे ।

وَمَا يُكَذِّبُ بِهٖٓ اِلَّا كُلُّ مُعْتَدٍ اَثِيْمٍ ۝١٢

(१२) त्यसलाई केवल त्यही झुठ्लाउने छ, जो सीमा उल्लंघन गर्ने तथा पापी हुन्छ ।

اِذَا تُتْلٰى عَلَيْهِ اٰيٰتُنَا قَالَ اَسَاطِيْرُ الْاَوَّلِيْنَ ۝١٣

(१३) जब त्यसका समक्ष हाम्रा आयतहरूको पाठ हुन्छ, त भन्दिन्छ कि यो पूर्वकालिक मानिसहरूका कथाहरू हुन् ।[2]

كَلَّا بَلْ ۜ رَانَ عَلٰى قُلُوْبِهِمْ مَّا كَانُوْا

(१४) यो होइन ![3] बरु उनका हृदयमा उनका

बनेको हुनेछ अर्थात् त्यसका मुखसम्म हुनेछ (सहीह मुस्लिम प्रलय तथा स्वर्गको विशेषण, प्रलयका दिनको विशेषताको अध्याय ।

[1] سِجِّيْن सिज्जीन केही विदहरू भन्छन् कि سِجْن (कारागार) सित छ अर्थात् जेलका समान एउटा साँगुरिएको ठाउँ हो । केही भन्दछन् कि यो पातालमा एउटा स्थान हो जहाँ काफिरहरू बहुदेववादी तथा अत्याचारीहरूका आत्माहरू तथा उनका कर्मपत्र एकत्रित तथा सुरक्षित हुन्छन् । यसकारण अगाडि त्यसलाई लिखित पुस्तक भनिएको छ ।

[2] अर्थात् त्यसका पापहरूमा तत्परता तथा सीमाको उल्लंघन यति बढिसकेको छ कि अल्लाहका आयतहरू सुनेर त्यसमाथि चिन्तन-मननको सट्टा तिनलाई अघिका कथाहरू भन्दछन् ।

[3] अर्थात् यो कुर्आन कहानीहरू होइन जस्तो कि काफिर भन्दछन् तथा ठान्दछ अपितु अल्लाहको वाणी तथा त्यसको प्रकाशना हो जो त्यसका रसूलमाथि जिब्रील अमीनद्वारा अवतरित भएको छ ।

يَكْسِبُونَ ﴿١٤﴾

कर्मका कारण खिया लागिसकेको छ ।[1]

كَلَّا إِنَّهُمْ عَن رَّبِّهِمْ يَوْمَئِذٍ لَّمَحْجُوبُونَ ﴿١٥﴾

(१५) यही होइन, यिनीहरू त्यसदिन आफ्ना प्रभुका दर्शनबाट पनि वञ्चित रहनेछन् ।[2]

ثُمَّ إِنَّهُمْ لَصَالُوا الْجَحِيمِ ﴿١٦﴾

(१६) अनि यिनीहरू निश्चित रुपले नरक्मा हुर्रयाइनेछन् ।

ثُمَّ يُقَالُ هَٰذَا الَّذِي كُنتُم بِهِ تُكَذِّبُونَ ﴿١٧﴾

(१७) अनि भनिनेछ यही हो त्यो जसलाई तिमी झुठ्लाइरहयौ ।

كَلَّا إِنَّ كِتَابَ الْأَبْرَارِ لَفِي عِلِّيِّينَ ﴿١٨﴾

(१८) अवश्य अवश्य सदाचारीहरूको कर्मपत्र इल्लीईनमा छ ।[3]

وَمَا أَدْرَاكَ مَا عِلِّيُّونَ ﴿١٩﴾

(१९) तिमीलाई के थाहा ती इल्लीईन के हो ?

كِتَابٌ مَّرْقُومٌ ﴿٢٠﴾

(२०) (त्यो त) लेखिएको किताब हो ।

يَشْهَدُهُ الْمُقَرَّبُونَ ﴿٢١﴾

(२१) त्यसका निकट समीपवर्ती फरिश्ताहरू उपस्थित हुन्छन् ।



---

[1]अर्थात् उनका हृदय यस ईशवाणीप्रति विश्वास यसकारण गर्दैनन् कि उनका हृदयमा पापहरूको अधिकताको कारण पर्दा परिहालेका छन् तथा खिया लागिसकेका छन् । رَيْنٌ पापहरूको त्यो कलिमा हो जो निरन्तर पाप गर्नुका कारण उनका हृदयमा छाइहाल्छ । हदीसमा छ मानिस जब पाप गर्दछ त त्यसका हृदयमा एउटा कालो धब्बा पर्नजान्छ यदि तौबा (क्षमा याचना) गर्दछ भने त्यो कलिमा हटाइन्छ तथा यदि तौबाका साटो पापमाथि पाप गर्दैजान्छ त त्यो कलिमा बढ्दैजान्छ यहाँसम्मकि त्यसका पुरै हृदयमा छाउँछ । यो त्यो رَيْن "रैन" हो जसको चर्चा पवित्र कुर्आनमा छ (तिर्मिजी सूरतुल मुतफ़्फ़ेफ़ीन, इब्ने माजा, किताबुज़ जुहद, बाबु ज़िकरीज जुनूबे, मुसनद अहमद २/२९७)

[2]यसका विपरीत ईमानवाला अल्लाहका दर्शनबाट सम्मानित हुनेछन् ।

[3] عِلِّيِّين इल्लीईन عُلُوّ उलु (ऊँचाई) सित छ । यो सिज्जीनका विपरीत आकाशहरूमा अथवा स्वर्ग वा सिद्रतुल मुनतहा अथवा अर्श (अल्लाहका सिंहासन) का पास स्थान छ जहाँ पुनीत मानिसहरूका आत्मा तथा उनका कर्मपत्र सुरक्षित हुन्छन् । जसका निकटवर्ती फरिश्ताहरू उपस्थित रहन्छन् ।

إِنَّ ٱلْأَبْرَارَ لَفِى نَعِيمٍ ﴿٢٢﴾

(२२) निश्चित रुपले सदाचारीहरू अति सुखमा हुनेछन् ।

عَلَى ٱلْأَرَآئِكِ يَنظُرُونَ ﴿٢٣﴾

(२३) मसेहरीहरूमाथि (बसेर) हेरिराखेका हुनेछन् ।

تَعْرِفُ فِى وُجُوهِهِمْ نَضْرَةَ ٱلنَّعِيمِ ﴿٢٤﴾

(२४) त उनका मुखबाट नै सुखहरूको सुखदालाई चिनिनेछ ।[१]

يُسْقَوْنَ مِن رَّحِيقٍ مَّخْتُومٍ ﴿٢٥﴾

(२५) यिनीहरू अत्यन्त शुद्ध मदिरापान गराइनेछन् ।[२]

خِتَٰمُهُۥ مِسْكٌ ۚ وَفِى ذَٰلِكَ فَلْيَتَنَافَسِ ٱلْمُتَنَٰفِسُونَ ﴿٢٦﴾

(२६) जसमा कस्तुरीको मोहर (छाप) लागेको हुनेछ । इच्छा गर्नेहरूलाई त्यसैको इच्छा गर्नुपर्छ ।[३]

---

[१]जुनप्रकार संसारका सम्पन्न मानिसहरूका अनुहारमा साधारणतः ताज़गी तथा हरियाली हुन्छ जो ती सुख सुविधाहरूको द्योतक हुन् जो उनीहरूलाई प्रचुरताले प्राप्त हुन्छ । यसैप्रकार स्वर्गवासीहरूका लागि जो आदर-सम्मान तथा उपहारहरूको अधिकता भइराखेको हुनेछ त्यसका प्रभाव उनका अनुहारहरूमा पनि देखिनेछन् तथा आफ्नो सुन्दरता तथा शोभा तथा प्रकाश एवं ज्योतिबाट चिनिनेछन् कि उनी स्वर्गीय हुन् ।

[२]مَّخْتُومٍ رَّحِيقٍ रहीक स्वच्छ तथा सफा मदिरालाई भन्छन् जसमा कुनै वस्तुको मिश्रण नहोस् मुद्रा लागेको । यसको विशुद्धताको अधिक स्पष्टीकरणका लागि छन् । केही विद्वहरूका विचारमा यो मिश्रितका अर्थमा छ अर्थात् मदिरामा कस्तुरीको मिश्रण हुनेछ जसबाट त्यसको स्वाद दुईगुना तथा सुगन्ध अति स्फुर्तिदायक हुनेछ, केही भन्दछन् कि यो خَتْم खतमसित छ अर्थात् त्यको अन्तिम घूँट कस्तुरीको हुनेछ । केही خِتَام खितामको अर्थ सुगन्ध गर्दछन् । यस्तो मदिरा जसको सुगन्ध कस्तूरीका समान हुनेछ । (इब्ने कसीर) हदीसमा पनि यो शब्द आएको छ । नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले भन्नुभयो: जुन मोमिनले कुनै तिर्खाएको मोमिनलाई एक घूँट पानी पिलायो अल्लाह (तआला) क़्यामतका दिन त्यसलाई الرحيق المختوم पिलाउने छ, जसले कुनै भोका मोमिनलाई खाना खुवायो, अल्लाह (तआला) ले उसलाई स्वर्गका फल खुवाउनेछ । जसले कुनै नाङ्गोलाई वस्त्र पहिरायो अल्लाह (तआला) ले त्यसलाई स्वर्गको हरियो वस्त्र पहिराउनेछ । (मुसनद अहमद ३/१३-१४)

[३]अर्थात् सदाचारीहरूलाई यस्तै क्रमहरूमा अग्रसर हुनुपर्छ जसका प्रतिफल स्वर्ग तथा त्यसका सुविधाहरूमा तथा सुख प्राप्त छन् जस्तै (सूरः अस्साफ्फात-६१) मा भन्यो:

﴿لِمِثْلِ هَٰذَا فَلْيَعْمَلِ ٱلْعَٰمِلُونَ﴾

وَمِزَاجُهُۥ مِن تَسْنِيمٍ ﴿٢٧﴾

(२७) तथा त्यसमा तस्नीमको मिश्रण हुनेछ ।[1]

عَيْنًا يَشْرَبُ بِهَا ٱلْمُقَرَّبُونَ ﴿٢٨﴾

(२८) अर्थात् त्यो जलस्रोत जसका पानी निकटवर्ती मानिसहरू पिउनेछन् ।

إِنَّ ٱلَّذِينَ أَجْرَمُوا۟ كَانُوا۟ مِنَ ٱلَّذِينَ ءَامَنُوا۟ يَضْحَكُونَ ﴿٢٩﴾

(२९) निःसन्देह पापीहरू ईमान भएकाहरूको उपहास उडाउने गर्दथे ।[2]

وَإِذَا مَرُّوا۟ بِهِمْ يَتَغَامَزُونَ ﴿٣٠﴾

(३०) तथा उनका निकटबाट गुज्रदा आँखाको झिम्काई (एवं संकेतले) उनको अपमान गर्दथे ।[3]

وَإِذَا ٱنقَلَبُوٓا۟ إِلَىٰٓ أَهْلِهِمُ ٱنقَلَبُوا۟ فَكِهِينَ ﴿٣١﴾

(३१) तथा जब आफन्तहरूतिर फर्कन्थे तब हाँसो-ख्याल गर्दथे ।[4]

وَإِذَا رَأَوْهُمْ قَالُوٓا۟ إِنَّ هَٰٓؤُلَآءِ لَضَآلُّونَ ﴿٣٢﴾

(३२) तथा जब उनलाई देख्दथे त भन्दथे कि निःसन्देह यिनीहरू गुमराह, (कुमार्गमा पथभ्रष्ट) छन् ।[5]

---

[1] تَسْنِيم को अर्थ ऊँचाई हो । ऊँटको कोहान (जुरो) जो त्यसका शरीरभन्दा अग्लो हुन्छ, त्यसलाई سِنَام सिनाम भनिन्छ । चिहानलाई अग्लो गर्नलाई पनि تَسْنِيمُ القُبُورِ तसनीमुल कुबूर भनिन्छ । अर्थ यो हो कि त्यसमा तसनीम नामक मदिराको नाम हुनेछ । जो स्वर्गका माथिका भागहरूबाट एउटा स्रोतद्वारा आउनेछ । यो स्वर्गको सर्वोत्तम तथा उच्चतम मदिरा हुनेछ ।

[2] यिनीहरू उनीहरूलाई हीन ठानेर उनको उपहास गर्दथे ।

[3] غَمْـــزٌ को अर्थ हुन्छ परेली तथा आँखीभौंबाट संकेत गर्नु अर्थात् एक अर्कालाई परेली तथा आँखीभौंको इसारा गरेर उनको अवहेलना तथा उनका धर्ममाथि व्यङ्ग्य गर्दथे।

[4] अर्थात् ईमान भएकाहरूको चर्चा गरेर प्रसन्न हुन्थे तथा हाँसो-ख्याल गर्दथे । दोस्रो अभिप्राय यसको यो हो कि जब आफ्ना घरहरूतिर फर्कन्थे त त्यहाँ सम्पन्नता तथा सुख-सुविधाले उनको अभिनन्दन गर्दथे तथा जे चाहन्थे उनलाई प्राप्त हुन्थ्यो यसका उपरान्त पनि उनीहरूले अल्लाहको कृतज्ञता देखाएनन् बरु ईमान भएकाहरूको अवहेलना तथा उनीमाथि डाह गर्नुमा तत्पर रहे । (इब्ने कसीर)

[5] अर्थात् एकेश्वरवादी बहुवादीको दृष्टिमा तथा ईमान भएका काफिरहरूको दृष्टिमा गुमराह (पथभ्रष्ट) हुन्छन् । यही स्थिति आज पनि छ विपथ आफूलाई सत्यवादी तथा सत्यवादीलाई कुमार्ग विश्वास गराउँछन् यहाँसम्मकि एउटा

(३३) यिनी उनीमाथि रक्षक बनाएर त पठाइएनन् ।[१]

وَمَآ أُرۡسِلُواْ عَلَيۡهِمۡ حَٰفِظِينَ

(३४) त आज ईमान भएकाहरू ती काफ़िरहरूमाथि हाँस्नेछन् ।[२]

فَٱلۡيَوۡمَ ٱلَّذِينَ ءَامَنُواْ مِنَ ٱلۡكُفَّارِ يَضۡحَكُونَ

(३५) सिंहासनमा बसी हेरिराखेका हुनेछन् ।

عَلَى ٱلۡأَرَآئِكِ يَنظُرُونَ

(३६) अब इन्कार गर्नेहरूले जस्तो यिनीहरू गर्दथे पुरा-पुरा बदला पाइहाले ।[३]

هَلۡ ثُوِّبَ ٱلۡكُفَّارُ مَا كَانُواْ يَفۡعَلُونَ

## सूरतुल इंशिकाक-८४

سُورَةُ الانشِقَاقِ

सूरतल इंशिक़ाक़ मक्कामा अवतरित भएको तथा यसमा पच्चीस आयतहरू छन् ।

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

(१) जब आकाश फाट्नेछ ।[४]

إِذَا ٱلسَّمَآءُ ٱنشَقَّتۡ



सर्वथा असत्य सम्प्रदाय आफूबाहेक न कसैलाई मोमिन भन्दछ न गन्दछ ।

[१]अर्थात् यी काफ़िर मुसलमानहरूमाथि निरीक्षक त बनाएर पठाइएका छैनन् कि प्रत्येक समय मुसलमानहरूका कर्म तथा स्थितिहरूलाई हेरिराखून् तथा उनीमाथि टिप्पणी गरिरहून् । अर्थात् जब यसका उत्तरदायी नै छैनन् त यस्तो किन गर्दछन्?

[२]अर्थात् जस्तो काफ़िर संसारमा ईमानवालामाथि हाँस्दथे । केयामतका दिन यी काफ़िर अल्लाहको पकडमा हुनेछन् तथा ईमानवाला उनीमाथि हाँस्नेछन् । उनलाई हाँसो यस कुरामा आउँछ कि यिनी कुमार्ग हुनुका उपरान्त हामीलाई कुमार्ग को थिए ? तथा को यस योग्य थिए कि त्यसमाथि हाँसियोस् ।

[३]ثُوِّبَ को अर्थ हो أُثِيبَ प्रतिफल दिइए । अर्थात् के काफ़िरहरूलाई उनी जे-जति गर्दथे प्रतिफल दिइएको छ ।

[४]**सूरतुल इंशिकाक** : अर्थात् जब प्रलय घटित हुनेछ ।

وَأَذِنَتْ لِرَبِّهَا وَحُقَّتْ ۝٢

(२) तथा आफ्ना प्रभुका आदेशलाई सतर्क भएर सुन्नेछ ।[1] तथा उसका योग्य त्यो छ ।[2]

وَإِذَا الْأَرْضُ مُدَّتْ ۝٣

(३) तथा धर्ती (तानिएर) फैलाइनेछ ।[3]

وَأَلْقَتْ مَا فِيهَا وَتَخَلَّتْ ۝٤

(४) तथा त्यसमा जे छ ओकलिदिन्छ तथा रित्तो हुनेछ ।[4]

وَأَذِنَتْ لِرَبِّهَا وَحُقَّتْ ۝٥

(५) तथा आफ्ना प्रभुका आदेशमा कान थाप्नेछ ।[5] तथा त्यसैका योग्य त्यो छ ।

يَا أَيُّهَا الْإِنْسَانُ إِنَّكَ كَادِحٌ إِلَىٰ رَبِّكَ كَدْحًا فَمُلَاقِيهِ ۝٦

(६) हे मनुष्य ! तिमी आफ्ना प्रभुसित साक्षात्कारसम्म यो प्रयत्न तथा समस्त कार्य एवं परिश्रम गरेर त्यससित भेट गर्नेवाला छौ ।[6]

[1]अर्थात् अल्लाहले त्यसलाई फाट्नुको आज्ञा दिनेछ जसलाई त्यो सुन्नेछ तथा त्यसको पालन गर्नेछ ।

[2]अर्थात् त्यसलाई यही योग्य छ कि सुनोस् तथा पालन गरोस् कि त्यो सबैमाथि प्रभुत्वशाली छ तथा सबै त्यसका अधीन छन् । त्यसको आज्ञाबाट मुख फर्काउने कसलाई साहस हुनसक्छ ?

[3]अर्थात् त्यसको लम्बाइ-चौडाईमा अधिक विस्तार गरिनेछ । अथवा अभिप्राय यो हो कि त्यसमाथि जुन पर्वत आदि छन् सब कण-कण गरेर धर्तीलाई सफा तथा समतल गरिदिइनेछ जसमा कुनै अग्लो-होचो रहनेछैन ।

[4]अर्थात् जुन मूर्दाहरू भूमिमा गाडिएका छन् । सबै जीवित भई बाहिर निस्केर आउनेछन् । जुन कोष त्यसको भित्र स्थित छ त्यो उनीहरूलाई प्रकाशित गर्नेछ तथा स्वयं सर्वथा खाली हुनेछ ।

[5]अर्थात् फ्याँक्नु तथा खाली हुनुको जो आज्ञा दिइनेछ त्यसका अनुसार काम गर्नेछ।

[6]यहाँ मानिस साधारण रुप हो जसमा मुसलमान तथा काफिर सबै सम्मिलित छन् । كَدْح कद्ह: कडा परिश्रमलाई भन्छन् त्यो श्रम राम्रा कामहरूका लागि होस् अथवा नराम्राका लागि । अभिप्राय यो हो कि जब उपरोक्त कुरा अस्तित्वमा आउनेछ अर्थात प्रलय आउनेछ त हे मानिस तिमीले जुन राम्रो अथवा नराम्रो काम गरेका हुनेछौ, त्यो आफ्ना सामु पाउनेछौ तथा तदानुसार तिमीलाई राम्रो वा नराम्रो प्रतिफल प्राप्त हुनेछ । अगाडि त्यसको अधिक विवरण एवं स्पष्टीकरण छ ।

| | |
|---|---|
| (७) त त्यस समय जुन व्यक्तिका दाहिने हातमा कर्मपत्र दिइनेछ । | فَأَمَّا مَنْ أُوتِيَ كِتَٰبَهُۥ بِيَمِينِهِۦ ۝٧ |
| (८) त्यसको हिसाब त अत्यन्त सरलताले लिइनेछ ।[1] | فَسَوْفَ يُحَاسَبُ حِسَابًا يَسِيرًا ۝٨ |
| (९) तथा त्यो आफ्ना परिवारवालाहरूतिर प्रसन्नतापूर्वक फर्कि आउनेछ ।[2] | وَيَنقَلِبُ إِلَىٰٓ أَهْلِهِۦ مَسْرُورًا ۝٩ |
| (१०) परन्तु जुन व्यक्तिको कर्मपत्र त्यसको पिठ्यूँका पछाडिबाट दिइनेछ । | وَأَمَّا مَنْ أُوتِيَ كِتَٰبَهُۥ وَرَآءَ ظَهْرِهِۦ ۝١٠ |
| (११) त त्यसले मृत्युलाई बोलाउन थाल्नेछ ।[3] | فَسَوْفَ يَدْعُوا۟ ثُبُورًا ۝١١ |

[1]सरल हिसाब यो हो कि मोमिनको कर्मपत्र प्रस्तुत गर्नेछ त्यसका दोष पनि त्यसका सामु ल्याइनेछन् अनि अल्लाहले आफ्नो दयालुताले एवं अनुग्रहले त्यसलाई क्षमा गरिदिनेछ । आदरणीया आयशा भन्नुहुन्छ कि रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) ले भन्नुभयो: जसको हिसाब लिइयो त्यो बर्बाद भयो । मैले भने हे अल्लाहका रसूल ! अल्लाहले मलाई तपाईंका लागि बलिदान गरोस्, के अल्लाहले यो भन्नुभएको छैन कि जसलाई कर्मपत्र दाहिने हातमा दिइनेछ, त्यसको हिसाब सहज हुनेछ । (आदरणीय आयशाको प्रयोजन यो थियो कि यस आयतका अनुसार त मोमिनको पनि हिसाब हुनेछ किन्तु त्यसले विनाशको सामना गर्नुपर्ने छैन) । उहाँले स्पष्ट गर्नुभयो 'यो त पेशी हो' अर्थात् मोमिनका साथ हिसाबको मामिला हुनेछैन एउटा सरसरी पेशी हुनेछ । मोमिन प्रभुका अगाडि प्रस्तुत गरिनेछन् जससित सोधपूछ भयो त्यो खतम भयो । (सहीह बुख़ारी तफ़सीर सूरतिल इंशिक़ाक) एउटा अर्को रिवायतमा छ । आदरणीय आएशा भन्नुहुन्छ, नबी सल्लल्लाहु अलैहि व सल्लम) आफ्ना केही नमाज़मा यो दुआ पढ्नुहुन्थ्यो «اللَّهُمَّ حَاسِبْنِي حِسَابًا يَسِيرًا» (अल्लाह मेरो हिसाब सहज गर्नु) नमाज़बाट अवकाशका समयमा मैले सोधें, हिसाबे यसीर (सहज हिसाब) को के अभिप्राय छ ? भन्नुभयो अल्लाहले त्यसको कर्मपत्र हेर्नेछ अनि त्यसलाई क्षमा गरिदिनेछ (मुसनद अहमद ६/४८)

[2]अर्थात् जो त्यसका घरवालाहरूमध्ये स्वर्गीय हुनेछन् । अथवा त्यसबाट अभिप्राय हूरहरू (स्वर्गका नारीहरू) तथा बालक हुन् जो सेवाका लागि स्वर्गमा पाइनेछन् ।

[3] ثُبُورًا विनाश, हानि अर्थात् त्यो चिच्याउने पुकार्नेछ तथा हाय-हाय गर्नेछ किं म त मारिए ।

وَيَصْلٰى سَعِيْرًا ﴿١٢﴾

(१२) तथा प्रज्जवलित नरकमा प्रवेश गर्नेछ।

اِنَّهٗ كَانَ فِيْٓ اَهْلِهٖ مَسْرُوْرًا ﴿١٣﴾

(१३) त्यो व्यक्ति आफ्ना सम्बन्धिहरूमा (संसारमा) प्रसन्न थियो ।[1]

اِنَّهٗ ظَنَّ اَنْ لَّنْ يَّحُوْرَ ﴿١٤﴾

(१४) त्यसको अनुमान थियो कि अल्लाहतिर फर्केर जाने नै छैन ।[2]

بَلٰٓى اِنَّ رَبَّهٗ كَانَ بِهٖ بَصِيْرًا ﴿١٥﴾

(१५) किन होइन ?[3] यद्यपि त्यसको प्रभुले त्यसलाई राम्ररी हेरिराखेको थियो ।[4]

فَلَآ اُقْسِمُ بِالشَّفَقِ ﴿١٦﴾

(१६) मलाई सन्ध्याको लालिमाको सौगन्ध ।[5]

وَالَّيْلِ وَمَا وَسَقَ ﴿١٧﴾

(१७) तथा रात्रिको एवं त्यसको एकत्रित[6] वस्तुहरूको सौगन्ध

[1]अर्थात् संसारमा आफ्ना मनोकांक्षाहरूमा मँग्न थियो तथा आफ्ना परिवारमा वडो प्रसन्न थियो ।

[2]यो त्यसका प्रसन्न हुनुको कारण हो अर्थात् आख़िरत (परलोक) प्रति त्यसको विश्वास थिएन । حَـوْر को अर्थ हो फर्कनु जस्तो नबी (सल्लल्लाहु अलैहि व सल्लम) को दुआ (प्रार्थना) छ । «اللَّهُمَّ إِنِّي أَعُوذُ بِكَ مِنَ الْحَوْرِ بَعْدَ الْكَوْرِ» (सहीह मुस्लिम, अलहज्ज बावुमा यकूलु इजा रकिबा इला सफरिल हज्ज आदि तिर्मिजी, इब्ने माजा) मुस्लिममा शब्द "बादल् कौन" छ, अभिप्राय हो यस कुराबाट म शरण चाहन्छु कि ईमानका पश्चात कुफ्र तथा आज्ञापालनका पश्चात अवज्ञा अथवा पुण्यका पश्चात पापतिर फर्कूं ।

[3]एउटा अनुवाद त्यसको यो हो कि यो कसरी हुनसक्छ कि त्यो नफर्कोस् तथा पुनः जीवित नहोस् अथवा بَلٰى किन होइन । यो अवश्य आफ्ना प्रभुतिर फर्कनेछ ।

[4]त्यसको कुनै कर्म लुकेको छैन ।

[5]शफक् त्यस लालिमालाई भन्दछन् जो सूर्यास्तका पश्चात आकाशमा प्रकट हुन्छ तथा ईशाको समय आरम्भ हुनुसम्म रहन्छ ।

[6]अँध्यारो हुनासाथ प्रत्येक वस्तु आफ्ना विश्रामस्थल तथा निवासस्थानतिर एकत्र हुन्छ अर्थात् रातको अँध्यारोले अँध्यारा कुराहरूलाई आफूमा समेट्दछ ।

وَالْقَمَرِ إِذَا اتَّسَقَ ﴿١٨﴾

(१८) तथा पूर्ण चन्द्रमाको सौगन्ध ।[1]

لَتَرْكَبُنَّ طَبَقًا عَن طَبَقٍ ﴿١٩﴾

(१९) निःसन्देह तिमी एउटा स्थितिबाट अर्को स्थितिमा पुग्नेछौ ।[2]

فَمَا لَهُمْ لَا يُؤْمِنُونَ ﴿٢٠﴾

(२०) उनीहरूलाई के भएको छ कि ईमान स्वीकार्दैनन् ।

وَإِذَا قُرِئَ عَلَيْهِمُ الْقُرْآنُ لَا يَسْجُدُونَ ﴿٢١﴾

(२१) तथा जब उनका निकट कुर्आन पढिन्छ त सज्दा गर्दैनन् ।[3]

بَلِ الَّذِينَ كَفَرُوا يُكَذِّبُونَ ﴿٢٢﴾

(२२) बरु जसले कुफ्र गरे उनी झुठ्लाइरहेका छन् ।[4]

وَاللَّهُ أَعْلَمُ بِمَا يُوعُونَ ﴿٢٣﴾

(२३) तथा अल्लाह (तआला) राम्री जान्दछ जे-जति यिनी हृदयमा राख्दछन् ।[5]

فَبَشِّرْهُم بِعَذَابٍ أَلِيمٍ ﴿٢٤﴾

(२४) उनीहरूलाई कष्टदायी यातनाहरूको शुभ-सूचना सुनाइदिनुस् ।

إِلَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَهُمْ أَجْرٌ غَيْرُ مَمْنُونٍ ﴿٢٥﴾

(२५) परन्तु ईमानवाला तथा सदाचारीहरूलाई अगणित एवं अनन्त प्रतिफल दिइनेछ ।

---

[1] إِذَا اتَّسَقَ को अर्थ हो जब त्यो पूर्ण हुनजान्छ जस्तै त्यो तेह्रौं रातबाट सोह्रौं तिथिसम्मको रातमा रहन्छ ।

[2] طَبَق को मूल अर्थ कठिनाई हो यहाँ अभिप्राय ती कठिनाईहरू हुन् जो प्रलयका दिन घटित हुनेछन् अर्थात् त्यसदिन एकसे-एक अवस्था आउनेछ (फ़तहुल बारी तफ़सीर सूरतिल इंशिकाक़) यो सौगन्धको उत्तर हो ।

[3] हदीसहरूबाट यहाँ नबी (सल्लल्लाहु अलैहि व सल्लम) तथा सहाबाबाट सज्दा गर्नु सिद्ध छ ।

[4] अर्थात् ईमान स्वीकार्नुका विपरीत झुठ्लाउँछन् ।

[5] अर्थात् झुठ्लाए वा जुन काम उनी लुकेर गर्दछन् ।

# सूरतुल बुरूज-८५

سُوْرَةُ الْبُرُوْجِ

सूरतुल बुरुज मक्कामा अवतरित भएको तथा यसमा २२ आयतहरू छन्।

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

وَالسَّمَاۗءِ ذَاتِ الْبُرُوْجِ ①

(१) बुरुजहरू भएका आकाशको सौगन्ध।[१]

وَالْيَوْمِ الْمَوْعُوْدِ ②

(२) वाचा गरिएका दिनको सौगन्ध।[२]

وَشَاهِدٍ وَّمَشْهُوْدٍ ③

(३) उपस्थित हुनेहरू तथा उपस्थित गरिएको सौगन्ध।[३]

قُتِلَ اَصْحٰبُ الْاُخْدُوْدِ ④

(४) (कि) खाईवाला मारिए।[४]

---

*सूरतुल बुरुज* : नबी (सल्लल्लाहु अलैहि वसल्लम) ज़ोहर तथा अस्रमा सूरतुत्तारिक़ तथा सूरतुल बुरुज पढ्नु हुन्थ्यो। (तिर्मिजी)

[१] بُـرُوْج यो بُرْج (भवनको गुम्बद) बुर्जको बहुवचन हो) بُرْج को मूल अर्थ हो प्रकटन, यी ताराहरूका गन्तव्य हुन् जसलाई उनका भवनको हैसियत प्राप्त छ प्रकट तथा प्रकाशित हुनुका कारण उनलाई बुरुज भनिन्छ विवरणका लागि हेर्नुस् (अल फुरक़ान ६१ को भाष्य।) केही विदहरूले बुरुजसित अभिप्राय तारा लिएका छन् अर्थात् ताराहरू भएका आकाशको सौगन्ध। केहीका विचारमा यसबाट आकाशका द्वार अथवा चाँदका गन्तव्य अभिप्राय छ। (फ़तहुल कदीर)

[२] यसको सर्वसम्मतिबाट प्रलयको दिन अभिप्राय छ।

[३] شَـاهِد तथा مَشْـهُوْد को व्याख्यामा बडो मतभेद छ। इमाम शौकानीले हदीस तथा लक्षणहरूका आधारमा भनेका छन् कि शाहिद सित अभिप्राय जुमआ (शुक्रबार) को दिन हो। यस दिन जसले जुन कर्म गरेको हुनेछ। यसले प्रलयका दिन त्यसको साक्ष्य दिनेछ, तथा मशहूदसित अर्फा (नौं ज़िलहिज्जा) को दिन हो। जहाँ मानिस हज्जका लागि एकत्र तथा उपस्थित हुन्छन्।

[४] अर्थात् जुन मानिसहरूले (खाल्डाहरू) खनेर त्यसमा प्रभुलाई मान्नेहरूको विनाश गरे उनका लागि विनाश तथा बर्बादी छ। قُتِلَ को अर्थ हो لُعِنَ

النَّارِ ذَاتِ الْوَقُوْدِ ۙ
(५) त्यो एउटा अग्नि थियो इन्धन भएको ।[1]

اِذْ هُمْ عَلَيْهَا قُعُوْدٌ ۙ
(६) जबकि ती मानिस त्यसका छेउछाउमा बसेका थिए ।[2]

وَّهُمْ عَلٰى مَا يَفْعَلُوْنَ بِالْمُؤْمِنِيْنَ شُهُوْدٌ ۗ
(७) तथा मुसलमानहरूका साथ जे गरिराखेका थिए त्यसलाई आफ्ना समक्ष देखिराखेका थिए ।

وَمَا نَقَمُوْا مِنْهُمْ اِلَّآ اَنْ يُّؤْمِنُوْا بِاللّٰهِ الْعَزِيْزِ الْحَمِيْدِ ۙ
(८) यिनीहरू ती मुसलमानहरूसित कुनै अन्य पापको बदला लिइराखेका थिएनन्, यसका अतिरिक्त कि उनी अत्यन्त प्रभावशाली प्रशंसा योग्य अल्लाहको शक्तिमाथि ईमान स्वीकार गरेका थिए ।

[1] الأخدود، النار सित सम्बन्धित बदल छ ذات الوقود यो النار को विशेष हो अर्थात् यी खाईहरू के थिए ? इन्धन भएको अग्नि थिए यो ईमान भएकाहरूलाई त्यसमा फ्याँक्नका लागि बालिएको थियो ।

[2]काफिर राजा तथा त्यसका कार्यकर्ता आगोका किनारमा उपस्थित ईमान भएकाहरूलाई पोलिने खेल हेरिराखेका थिए जस्तो कि आगामी आयतमा छ ।

[3]अर्थात् ती मानिसहरूको अपराध जसलाई आगोमा हुरहुर्याइँदै थियो यो थियो कि ती प्रभुत्वशाली अल्लाहमाथि ईमान स्वीकार गरेका थिए यस वाक्यको विवरण जो सहीह हदीसहरूबाट सिद्ध छ, यो हो ।

***खाईवालाहरूको कथा:*** विगत युगमा एउटा राजाको एउटा जादूगर थियो । जब त्यो बुढो भयो त राजासित भन्यो । मलाई एउटा चतुर बालक देऊ जसलाई म आफ्नो ज्ञान सिकाइदिऊ । राजाले एउटा चतुर बालक खोजेर त्यसलाई सुम्पिदियो । बालकका मार्गमा एउटा राहिब (सन्त) को पनि घर थियो यो बालक आउँदा-जादा त्यसको पास पनि जान्दथ्यो र त्यसका कुराहरू सुन्थ्यो जो त्यसलाई राम्रो लाग्थ्यो । यसैप्रकार यो क्रम चलिरह्यो । एक पटक बालक गइराखेको थियो कि मार्गमा एउटा निकै ठूलो जनावर (सिंह अथवा सर्प) मानिसहरुको मार्ग रोकेको थियो । बालकले सोच्यो आज म पत्ता लगाउँछु कि जादूगर सही छ अथवा राहिब ? त्यसले एउटा ढुंगा लियो तथा भन्यो, हे अल्लाह यदि राहिबको मामिला तिम्रो निकट जादूगरका मामिलाभन्दा उत्तम तथा प्रिय छ भने यस जनावरलाई मारिदेऊ ताकि मानिसहरूको यातायात चालू हुन जाओस् । यो भनेर उसले पत्थर हान्यो तथा जनावर मारिहाल्यो । बालकले यो वाक्य राहिबलाई बतायो राहिबले भन्यो छोरा अब तिमी निपुण भइहालेका छौ अब तिम्रो परीक्षाको आरम्भ हुनुछ किन्तु यस परीक्षाका समय मेरो नाम न बताउनु ।

ٱلَّذِى لَهُۥ مُلۡكُ ٱلسَّمَٰوَٰتِ وَٱلۡأَرۡضِۚ وَٱللَّهُ عَلَىٰ كُلِّ شَىۡءٍ شَهِيدٌ ۝٩

(९) जसको लागि आकाशहरू तथा धर्तीको राज्य छ तथा अल्लाह (तआ़ला) सर्वव्याप्त तथा राम्ररी परिचित छ ।

إِنَّ ٱلَّذِينَ فَتَنُواْ ٱلۡمُؤۡمِنِينَ وَٱلۡمُؤۡمِنَٰتِ ثُمَّ لَمۡ يَتُوبُواْ فَلَهُمۡ عَذَابُ جَهَنَّمَ وَلَهُمۡ عَذَابُ ٱلۡحَرِيقِ ۝١٠

(१०) नि:सन्देह जुन मानिसहरूले मुसलमान पुरुष तथा महिलाहरूलाई प्रताडित गरे, अनि क्षमा पनि माँगेनन्, उनका लागि नरक़को यातना तथा पोलिनुको यातना छ ।

إِنَّ ٱلَّذِينَ ءَامَنُواْ وَعَمِلُواْ ٱلصَّٰلِحَٰتِ لَهُمۡ جَنَّٰتٌ تَجۡرِى مِن تَحۡتِهَا ٱلۡأَنۡهَٰرُۚ

(११) नि:सन्देह ईमान स्वीकार गर्ने एवं पुण्यकारी कार्य गर्नेहरूका लागि ती

यो बालक जन्मबाटै अन्धा तथा कोढ़ी आदिको उपचार पनि गर्दथ्यो किन्तु अल्लाहमाथि ईमान स्वीकार गर्नुका शर्तका साथ यसै शर्तमा उसले राजाका एउटा अन्धा साथीको आँखा पनि अल्लाहसित दुआ़ गरेर ठीक पारिदियो । यो बालकले यही भन्थ्यो कि यदि तिमी ईमान स्वीकार गर्नेछौ भने म अल्लाहसित प्रार्थना गर्नेछु, त्यसले स्वस्थ गरिदिनेछ । तथा अल्लाहले त्यसको प्रार्थनाले स्वस्थ गरिदिन्थ्यो । यो सूचना राजालाई पुग्यो त त्यो बडो व्याकुल भयो केही ईमानवालाहरूलाई त त्यसले हत गरायो । यस बालकका विषयमा केही मानिसहरूसित भन्यो कि यसलाई पर्वतको शिखरमा लगेर तल फ्याँकिदेऊ । त्यसले अल्लाहसित दुआ़ गऱ्यो पहाडमा कम्पन उत्पन्न भयो । जसबाट ती सबै खसेर मरे तथा अल्लाहले त्यसलाई बचाइहाल्यो । राजाले उसलाई अरु मानिसहरूलाई सुम्प्यो । भन्यो कि एउटा डुङ्गामा लगेर यसलाई समुद्रको बीच फ्याँकिदेऊ । त्यहाँ पनि त्यसको दुआ़ले डुङ्गा उल्टियो जसबाट ती सबै डुबे तथा त्यो बाँच्यो । त्यस बालकले राजासित भन्यो यदि तिमी मलाई मार्न चाहन्छौ भने त्यसको विधि यो हो कि एउटा खुला मैदानमा मानिसहरूलाई एकत्र गर तथा بِسۡمِ اللهِ رَبِّ هَٰذَا الغُلَامِ भनेर मलाई बाँड हान । राजाले त्यही गऱ्यो । जसबाट बालक मऱ्यो किन्तु सबै मानिसले भने कि हामी बालकका प्रभुमाथि ईमान स्वीकार गऱ्यौं । राजा झन् व्यग्र भयो । तथा उसले खाईहरू खन्न लगायो तिनमा आगो सल्काउन लगायो तथा आदेश दियो कि जो ईमानबाट फर्कन्न त्यसलाई आगोमा फ्याँकिदेऊ । यस्ता ईमानवाला आउँथे तथा हुरहुरयाईदै रहे यहाँसम्मकि एउटी स्त्री आई जससँग बच्चा थियो । त्यो केही हिच्कीचाइन् । बच्चा बोल्यो, आमा तपाईं धैर्य-धारण गर्नुस्, तपाईं सत्य मार्गमा हुनुहुन्छ (सहीह मुस्लिम संक्षिप्त, किताबुज जहद वररिकाक, बाबु किस्सते असहाबुल उखदूद) इमाम इब्ने क़सीरले अरु पनि वाक्य वर्णित गरेका छन्, जो यसभन्दा भिन्न छन् तथा भनेका छन् सम्भव छ यी भिन्न घटनाहरु (भिन्ना-भिन्नै स्थानहरुमा घटेका हुन् । (विस्तारका लागि हेर्नुस् तफ़सीर इब्ने क़सीर)

ذٰلِكَ الْفَوْزُ الْكَبِيْرُ ⑪

बगैंचा छन् जसका मुनि (शीतल जलका) सरिताहरू प्रवाहित छन्। यो ठूलो सफलता हो।

اِنَّ بَطْشَ رَبِّكَ لَشَدِيْدٌ ⑫

(१२) निःसन्देह तिम्रो प्रभुको पकड अत्यन्त शक्तिशाली छ।[1]

اِنَّهٗ هُوَ يُبْدِئُ وَيُعِيْدُ ⑬

(१३) त्यही प्रथम पटक पैदा गर्दछ तथा त्यसैले पुनः जीवित गर्नेछ।[2]

وَهُوَ الْغَفُوْرُ الْوَدُوْدُ ⑭

(१४) त्यो अत्यन्त क्षमाशील तथा अत्यन्त प्रेम गर्नेवाला छ।

ذُو الْعَرْشِ الْمَجِيْدُ ⑮

(१५) अर्शको स्वामी महान छ।[3]

فَعَّالٌ لِّمَا يُرِيْدُ ⑯

(१६) जे चाहन्छ त्यसलाई गरिदिनेवाला छ।[4]

---

[1]जब त्यो आफ्ना यी शत्रुहरूको पकड गर्न आए जो त्यसका रसूलहरूलाई झुठ्लाउँछन् तथा त्यसको आज्ञाको विरोध गर्दछन् त त्यसको पकडबाट कसैले उनीहरूलाई बचाउन सक्दैन।

[2]अर्थात् त्यही आफ्ना सामर्थ्य तथा शक्तिले प्रथम पटक पैदा गर्दछ अनि प्रलयका दिन पुनर्जीवन प्रदान गर्नेछ जस्तो प्रथम पैदा गरेको थियो।

[3]अर्थात् पूरा सृष्टिभन्दा महान तथा उच्चतम छ। तथा अर्श जो सर्वोपरि छ त्यो त्यसको आसन हो जस्तो कि सहाबा तथा ताबईन एवं मोहद्दिसीनको आस्था छ المجيد दयानिधि यो स्वरको मात्राका साथ ذو अर्थात् स्वामीको विशेषण हो अर्शको होइन। यद्यपि केही मानिस यसलाई अर्शको विशेषण मानेर यसलाई इ को मात्राका साथ पढ्दछन् अर्थ दुबै रुपमा सही छ। (इब्ने कसीर)

[4]अर्थात् त्यसले जे चाहन्छ गरिहाल्छ त्यसको आज्ञा तथा चाहतलाई कसैले हटाउन सक्दैन न त्यससित कोही सोध्न सक्छ। आदरणीय अबू बक्र सिद्दीकसित कसैले उनका मृत्यु रोगका समय प्रश्न गऱ्यो। के कुनै वैद्यले तपाईंलाई हेऱ्यो ? उनले उत्तर दिए, हो–प्रश्न गऱ्यो कि उसले के भन्यो ? भन्नुभयो कि उसले भनेको छ "إِنِّي فَعَّالٌ لِّمَا أُرِيدُ" म जे चाहन्छु गर्दछु मेरो मामिलामा कोही हस्तक्षेप गर्नेवाला छैन। (इब्ने कसीर) अभिप्राय यो हो कि अब मामिला वैद्यहरूका हातमा रहेन। मेरो अन्तिम समय आइसकेछ अब अल्लाह नै मेरो वैद्य छ जसको चाहतलाई हटाउन कसैमा शक्ति छैन।

هَلْ أَتٰىكَ حَدِيثُ الْجُنُودِ ﴿١٧﴾

(१७) तिमीलाई सेनाहरूको सूचना पनि प्राप्त भएको छ ।[1]

فِرْعَوْنَ وَثَمُودَ ﴿١٨﴾

(१८ अर्थात् फिर्औन तथा समूदको ।

بَلِ الَّذِينَ كَفَرُوا فِي تَكْذِيبٍ ﴿١٩﴾

(१९) (केही होइन) बरु काफ़िर त झुठ्लाउनमा लागेका छन् ।

وَاللّٰهُ مِن وَرَائِهِم مُّحِيطٌ ﴿٢٠﴾

(२०) तथा अल्लाह (तआ़ला) ले पनि उनलाई प्रत्येक तिरबाट घेरेको छ ।[2]

بَلْ هُوَ قُرْآنٌ مَّجِيدٌ ﴿٢١﴾

(२१) बरु यो कुर्आन हो अत्यन्त महिमा भएको ।

فِي لَوْحٍ مَّحْفُوظٍ ﴿٢٢﴾

(२२) सुरक्षित पुस्तकमा लेखिएको छ ।[3]

## सूरतुत्तारिक़ ८६

## سُورَةُ الطَّارِقِ

सूरतुत्तारिक़ मक्कामा अवतरित भयो तथा १७ आयत छन् ।

---

[1]अर्थात् जब उनीमाथि मेरो प्रकोप आयो तथा मैले उनीहरूलाई आफ्नो पकडमा लिइहाले । जसलाई कसैले हटाउन सकेन ।

[2]यो ﴿إِنَّ بَطْشَ رَبِّكَ لَشَدِيدٌ﴾ को प्रमाण तथा त्यसैमा जोड हो ।

[3]अर्थात् लौहे महफ़ूज (सुरक्षित पट्टिका) मा लेखिएको छ जहाँ फरिश्ता त्यसको सुरक्षाका लागि नियुक्त छन् अल्लाह (तआ़ला) आवश्यकता तथा अभिपाचनका अनुसार उतार्दछ ।

***सूरतुत्तारिक़:*** आदरणीय ख़ालिद उदवीले भने कि मैले रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) लाई सकीफ़का बजारमा धनुष अथवा लाठीका सहाराले देखें । उहाँ उनका पासमा उनीसित सहायता लिन आएका थिए । त्यहाँ मैले उहाँबाट म सूरतुत्तारिक़ सुने तथा मैले त्यसलाई कण्ठ गरिहाले । जबकि अझै मुसलमान भएको थिइन अनि मलाई अल्लाहले इस्लामबाट सम्मानित गर्‍यो तथा इस्लामको अवस्थामा मैले पढे, (मुस्नद अहमद ४/३३५ मजमऊज़ जवायेद ७/१३६) माननीय मुआज़ (रज़ी अल्लाहु अन्हु) एकपटक नमाज़मा सूरतुल बक़र: तथा अननिसा पढें । नबी (सल्लल्लाहु अलैहि व सल्लम) लाई खबर प्राप्त भयो त भन्नुभयो तिमी मानिसहरूलाई उपद्रवमा पार्दछौ, तिमीलाई त यही धेरै थियो कि وَالسَّمَاءِ وَالطَّارِقِ तथा وَالشَّمْسِ जस्ता सूरतहरू पढ्थे (नसाई किताबुल इफतेताह, बाबुल किराअते फिल मग़रिब)

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

وَالسَّمَآءِ وَالطَّارِقِ ①

(१) सौगन्ध छ आकाशको तथा अन्धकारमा प्रकाश प्रदान गर्नेवालाको

وَمَآ اَدْرٰىكَ مَا الطَّارِقُ ②

(२) तिमीलाई ज्ञात पनि छ कि त्यो रात्रिमा प्रकट हुने वस्तु के हो ।

النَّجْمُ الثَّاقِبُ ③

(३) त्यो प्रकाश भएको तारा हो ।[1]

اِنْ كُلُّ نَفْسٍ لَّمَّا عَلَيْهَا حَافِظٌ ④

(४) कोही यस्तो छैन जसमाथि रक्षक (फरिश्ताहरू) नहोऊन् ।[2]

فَلْيَنْظُرِ الْاِنْسَانُ مِمَّ خُلِقَ ⑤

(५) मनुष्यले हेर्नुपर्छ कि त्यो कुन वस्तुले बनाइएको छ ।

خُلِقَ مِنْ مَّآءٍ دَافِقٍ ⑥

(६) त्यो एउटा उफ्रने पानीबाट पैदा गरिएको छ ।[3]

[1]तारिक़सित के अभिप्राय छ । कुरआनले स्वयं स्पष्ट गरिदियो प्रकाशमान तारा । طُرُوق बनेको छ طَارِق बाट जसको अर्थ ढग्ढगाउनु हो । किन्तु طَارِق रातका आगन्तुकका लागि उपर्युक्त हुन्छ । ताराहरूलाई पनि तारिक यसैकारण भनिन्छ कि त्यो दिनमा अदृश्य हुन्छन् र रातमा निस्कन्छन् ।

[2]अर्थात् प्रत्येक प्राणीमाथि अल्लाहको तर्फबाट फरिश्ता नियुक्त छन् जो त्यसका राम्रा-नराम्रा सबै कर्म लेख्दछन् । केही विदहरू भन्छन् कि यी मानिसहरूको सुरक्षा गर्ने फरिश्ताहरू हुन् जस्तो कि सुरतुर रअदको आयत ११ बाट पनि पारित हुन्छ कि मानिसको रक्षाका लागि तथा कथन लेख्नेहरू हुन्छन् ।

[3]अर्थात् वीर्यबाट जो सहवासका अन्तमा तीव्र गतिले निस्कन्छ यही पानीको थोपा (वीर्य) स्त्रीका गर्भाशयमा जान्छ र गएर यदि अल्लाहको आदेश हुन्छ भने गर्भको कारण बन्दछ ।

| | |
|---|---|
| (७) जो पिठ्यूँ तथा छातिका मध्येबाट निस्कन्छ ।[1] | يَخۡرُجُ مِنۢ بَيۡنِ ٱلصُّلۡبِ وَٱلتَّرَآئِبِ ۝٧ |
| (८) नि:सन्देह त्यो त्यसलाई फर्काइ ल्याउनुमा अवश्य सामर्थ्य राख्नेवाला छ ।[2] | إِنَّهُۥ عَلَىٰ رَجۡعِهِۦ لَقَادِرٞ ۝٨ |
| (९) जुन दिन गुप्त भेदीहरूको जाँच-पड्ताल हुनेछ ।[3] | يَوۡمَ تُبۡلَى ٱلسَّرَآئِرُ ۝٩ |
| (१०) त न कुनै शक्ति काम लाग्नेछ त्यसको तथा न कोही सहायक हुनेछ ।[4] | فَمَا لَهُۥ مِن قُوَّةٖ وَلَا نَاصِرٖ ۝١٠ |
| (११) वर्षा भएको अवकाशको सौगन्ध ।[5] | وَٱلسَّمَآءِ ذَاتِ ٱلرَّجۡعِ ۝١١ |

[1]भनिन्छ कि पिठ्यूँ पुरुषको तथा वक्ष स्त्रीको, यी दुबैका पानीबाट मनुष्यको उत्पत्ति हुन्छ, परन्तु त्यसलाई एउटै पानी यसकारण भनिन्छ कि यी दुबै मिलेर एउटै हुनजान्छ । تَرَائِب बहुवचन हो تَرِيبَة को छातिको त्यो भाग जो हार लगाउनुको ठाउँ हो ।

[2]अर्थात् मानिस मर्नुका पश्चात त्यो त्यसलाई पुन: जीवित गर्नुको सामर्थ्य राख्दछ केहीका विचारमा यसको अभिप्राय यो हो कि त्यसले त्यस पानीको थोपा पुन: अङ्गमा फर्कनुमा सामर्थ्य राख्दछ जहाँबाट त्यो निस्केको थियो । पहिला भावार्थलाई इमाम शौकानी तथा इमाम इब्ने जरीर तबरीले अधिक सही मानेका छन् ।

[3]अर्थात् प्रकट हुनेछन् । किनकि तिनमा पुण्य तथा दण्ड पाइनेछ । बरु हदीसमा वर्णन छ प्रत्येक विश्वासघातीका कुल्लाहका पास (नितम्बनिर) झण्डा गाडिदिनेछ तथा यो घोषणा गरिदिनेछ कि अमुक पुत्र अमुकका साथ विश्वासघात गरेको छ (सहीह बुख़ारी किताबुल जिजिया बाबु इसमिल गादिर लिल बर्रे वल फ़ाजिर, मुस्लिम किताबुल जिहाद बाबु तहरीमिल गदरे) अभिप्राय यो हो कि त्यहाँ कसैको कुनै कर्म गुप्त रहनेछैन ।

[4]अर्थात् न स्वयं मानिसका पास त्यति शक्ति हुनेछ कि त्यो अल्लाहको यातनाबाट बच्न सकोस् न अन्य कुनैतिरबाट त्यसलाई कुनै सहायता प्राप्त हुनसक्नेछ जुन कि उसलाई अल्लाहको यातनाबाट बचाउन सकोस् ।

[5]رَجۡع को शाब्दिक अर्थ हो, फर्कनु तथा पल्टनु । वर्षा पनि पटक-पटक फर्केर हुन्छ । यसकारण वर्षालाई رَجۡع का शब्दले व्यञ्जित गरिएको छ । केही भन्दछन् कि बादल समुद्रहरूबाट पानी लिन्छ अनि त्यही पानी समुद्रलाई फर्काइदिन्छ अत: वर्षालाई رَجۡع भनिन्छ ।

وَالْأَرْضِ ذَاتِ الصَّدْعِ ﴿١٢﴾

(१२) तथा फाट्ने धर्तीको सौगन्ध ।[1]

إِنَّهُ لَقَوْلٌ فَصْلٌ ﴿١٣﴾

(१३) निःसन्देह यो (कुरआन) अवश्य स्पष्ट निर्णय गर्ने भाषा हो ।[2]

وَمَا هُوَ بِالْهَزْلِ ﴿١٤﴾

(१४) तथा यो हाँसोको (तथा व्यर्थको) कुरा होइन ।[3]

إِنَّهُمْ يَكِيدُونَ كَيْدًا ﴿١٥﴾

(१५) परन्तु ती (काफिर) दाउ-घातमा छन् ।[4]

وَأَكِيدُ كَيْدًا ﴿١٦﴾

(१६) तथा म पनि एउटा दाउ चलाइराखेको छु ।[5]

---

केही विदहरू भन्छन् कि शुभ शगुनका लागि अरब वर्षालाई رَجْعٌ भन्दथे ताकि त्यो पटक-पटक भइरहोस् । (फ़तहुल क़दीर)

[1]अर्थात् धर्ती फाट्छ तब त्यसबाट बिरुवा बाहिर निस्कन्छ । धर्ती फाट्छ तब स्रोत प्रवाहित हुनजान्छ । यसैप्रकार (एक दिन आउनेछ कि धर्ती फाट्नेछ तथा मुर्दाहरू जीवित भई बाहिर निस्कि आउनेछन् । यसकारण धर्तीलाई फाट्नेवाली भनिएको छ ।

[2]यो सौगन्धको उत्तर हो अर्थात् प्रष्ट वर्णन गर्नेवाला । जसबाट त्यो सत्यमा विवेक हुनजान्छ ।

[3]अर्थात् आमोद-प्रमोद अथवा उपहासको कुरा होइन هَزْلٌ विलोम हो को جِدٌّ, अर्थात् एउटा स्पष्ट लक्ष्यको पुस्तक हो खेलकूदका समान व्यर्थ होइन ।

[4]अर्थात् नबी (सल्लल्लाहु अलैहि व सल्लम) जुन धर्म लिएर आउनु भएको छ, त्यसलाई विफल गर्नुको षडयन्त्र रच्दछन् । अथवा नबी (सल्लल्लाहु अलैहि व सल्लम) लाई धोका दिन्छन् तथा मुख अगाडि यस्ता कुरा गर्दछन् कि हृदयमा त्यसका विपरीत हुन्छ ।

[5]अर्थात् उनका चाल तथा षड्यन्त्रहरूबाट अचेत छैन । म पनि उनका विरुद्ध उपाय गरिराखेको छु । अथवा उनका चालहरूलाई विफल तुल्याइरहेको छ । كَيْدٌ गुप्त योजनालाई भन्दछन् जो नराम्रा उद्देश्यका लागि हुन्छ भने नराम्रो छ तथा लक्ष्य राम्रो छ भने नराम्रो होइन ।

فَمَهِّلِ الْكَٰفِرِينَ أَمْهِلْهُمْ رُوَيْدًا ﴿١٧﴾

(१७) तिमी काफ़िरहरूलाई अवसर देउ[1] उनीहरूलाई केही दिनका लागि छाडिदेउ।

## سُورَةُ الْأَعْلَىٰ

## सूरतुल आला-८७

सूरतुल आला मक्कामा अवतरित भएको तथा यसमा उन्नाइस आयतहरु छन्।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ।

سَبِّحِ اسْمَ رَبِّكَ الْأَعْلَى ﴿١﴾

(१) आफ्ना सर्वोच्च प्रभुका नामको पवित्रताको वर्णन गर।[2]

---

[1]अर्थात् उनका लागि तुरुन्त प्रकोपको माँग नगर अपितु उनलाई केही अवसर देऊ رُوَيْدًا: قَلِيلًا अथवा قَرِيبًا यो अवसर तथा समय दिनु पनि काफ़िरहरूका लागि अल्लाहको तर्फबाट एउटा उपाय स्वरुप हो। जस्तै (अल-आराफ़-१८२, १८३) मा भनेको छ :

﴿سَنَسْتَدْرِجُهُم مِّنْ حَيْثُ لَا يَعْلَمُونَ ۝ وَأُمْلِي لَهُمْ إِنَّ كَيْدِي مَتِينٌ﴾

**सूरतुल आला:** रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) यो सूरत तथा सूरतुल गाशिया ईदैन एवं जुमआमा पढ्नु हुन्थ्यो। यसैप्रकार वित्रको प्रथम रक्आतमा सूरतुल आला, दोस्रोमा अलकाफिरुन तथा तेस्रोमा सूरतुल इख़लास पढ्नुहुन्थ्यो।

माननीय मुआज़लाई जुन सूरतहरू पढ्नुको निर्देश दिइएको थियो तिनीहरूमध्ये एउटा यो पनि थियो (सिहाह मा यो सबै विवरण मौजुद छ)

[2]अर्थात् यस्ता कुराहरूबाट अल्लाहको पवित्रता जो त्यसका योग्य छैन। हदीसमा वर्णित छ कि नबी (सल्लल्लाहु अलैहि व सल्लम) यसका उत्तरमा पढ्ने गर्नुहुन्थ्यो سُبْحَانَ رَبِّيَ الْأَعْلَى (मुसनद अहमद १/२३२) अबू-दाऊद किताबुस्सलात, बाबुद दुआ फिस सलाते, अल्बानीले सहीह भनेका छन्) (विस्तृत जानकारीका लागि हेर्नुस् अलकौलुल् मक्बूल (पृष्ठ : ३८६-८७)

| | |
|---|---|
| (२) जसले पैदा गर्‍यो तथा सही एवं स्वस्थ बनायो ।[१] | الَّذِي خَلَقَ فَسَوَّىٰ ② |
| (३) तथा जसले अनुमान लगाएर निर्धारित गर्‍यो अनि मार्ग देखायो ।[२] | وَالَّذِي قَدَّرَ فَهَدَىٰ ③ |
| (४) तथा जसले ताजा घाँस उमार्‍यो ।[३] | وَالَّذِي أَخْرَجَ الْمَرْعَىٰ ④ |
| (५) अनि उसले त्यसलाई सुकाएर कालो कडा गरिदियो ।[४] | فَجَعَلَهُ غُثَاءً أَحْوَىٰ ⑤ |
| (६) हामीले तिमीलाई पढाउनेछौं, अनि तिमीले बिर्सने छैनौ ।[५] | سَنُقْرِئُكَ فَلَا تَنسَىٰ ⑥ |
| (७) परन्तु जे-जति अल्लाह चाहन्छ त्यो प्रकट एवं गुप्तलाई जान्दछ ।[६] | إِلَّا مَا شَاءَ اللَّهُ ۚ إِنَّهُ يَعْلَمُ الْجَهْرَ وَمَا يَخْفَىٰ ⑦ |

[१]हेर्नुस् सूरतुल इंफितारको भाष्य नं. ७ ।

[२]अर्थात् पुण्य तथा पापको । यसैप्रकार जीवन हेतुको । यो मार्गदर्शन सबै जीवहरूलाई प्रदान गर्‍यो । قَدَّرَ को अर्थ हो कुराहरूका प्रकार तथा विशेषताको अनुमान लगाएर मानिसलाई पनि त्यसको मार्ग दर्शायो । ताकि मानिस त्यसवाट लाभ प्राप्त गर्नसकोस् ।

[३]जसलाई जनावर चर्दछन् ।

[४]घाँस सुकेपछि त्यसलाई غُثَاءً भन्दछन् । أَحْوَىٰ कालो गरिदियो । अर्थात् हरियो घाँसलाई सुकाएर हामी काला कडा गरिदिन्छौं ।

[५](जिब्रील अलैहिस्सलाम) प्रकाशना लिएर आउँदा उहाँ छिटो-छिटो पढ्न थाल्नुहुन्थ्यो ताकि नबिर्सियोस् । अल्लाह (तआलाले भन्नुभयो: यस्तो शीघ्रता नगर्नुस् अवतरित प्रकाशना हामीले तपाईंलाई पढ्न लगाउनेछौं । अर्थात् तपाईंको जिब्रोमा चालु गरिदिनेछौं । अनि तपाईंले त्यसलाई बिर्सनु हुन्न परन्तु अल्लाहले जसलाई चाहनेछ । किन्तु अल्लाहले यस्तो चाहने यसकारण तपाईंलाई सबैथोक याद नै रह्यो । केही विदहरूले भने कि यसको भावार्थ यो कि जसलाई अल्लाहले निरस्त गर्न चाहनेछ, त्यसलाई तपाईंलाई बिर्सन लगाइदिन्छ । (फ़तहुल क़दीर)

[६]यो साधारण हो جَهْرَ कुरआनको यो भाग पनि हो जसलाई रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) कण्ठ गरुन् । तथा जुन तपाईंका छातिबाट मेटाइदिएको छ त्यो गुप्त छ । यसप्रकार جَهْرَ उच्च स्वरले पढोस् लुकेर काम गरोस् तथा खुलेर यी सबैलाई अल्लाह जान्दछ ।

وَنُيَسِّرُكَ لِلْيُسْرَىٰ ﴿٨﴾

(८) हामीले तपाईंका लागि सरलता उत्पन्न गरिदिनेछौं ।[1]

فَذَكِّرْ إِن نَّفَعَتِ الذِّكْرَىٰ ﴿٩﴾

(९) तसर्थ तपाईं शिक्षा दिँदै रहनुस् यदि शिक्षाले केही लाभ दिन्छ ।[2]

سَيَذَّكَّرُ مَن يَخْشَىٰ ﴿١٠﴾

(१०) तर्सनेवालाले त शिक्षा ग्रहण गरिहाल्नेछ ।[3]

وَيَتَجَنَّبُهَا الْأَشْقَى ﴿١١﴾

(११) (परन्तु) दुर्भाग्यपूर्ण यसभन्दा टाढा रहिहाल्नेछन् ।[4]

الَّذِي يَصْلَى النَّارَ الْكُبْرَىٰ ﴿١٢﴾

(१२) जो ठूलो आगोमा जानेछ ।

[1]यो पनि साधारण छ उदाहरणार्थ हामीले तपाईमाथि प्रकाशना (वह्य) सहज गरिदिनेछौं ताकि त्यसलाई कण्ठ गर्न तथा तदानुसार कर्म गर्न सरल हुनजाओस् । हामीले तपाईंलाई त्यस विधिको मार्ग दर्शाउनेछौं जो सरल हुनेछ । हामीले स्वर्गका कार्य तपाईंका लागि सहज गरिदिनेछौं । हामीले तपाईंका लागि यस्ता कार्य कर्म तथा कथन सरल गरिदिनेछौं जसमा भलाई होस् तथा हामीले तपाईंका लागि यस्तो धर्मविधान नियुक्त गर्नेछौं जो सरल, सोझो तथा सन्तुलित हुनेछ जसमा कुनै बाङ्गोपना संकुचन तथा कमी हुनेछैन ।

[2]अर्थात् शिक्षा तथा सदुपदेश त्यहाँ दिनुस् जहाँ प्रतीत होस् कि लाभदायक हुनेछ यो शिक्षा-दीक्षा तथा सदुपदेशको एउटा नियम एवं रीति भनिएको छ (इब्ने क़सीर) इमाम शौकानीका विचारमा भावार्थ यो हो कि तपाईं सदुपदेश दिँदै रहनुस् । किनकि सावधान गर्न तथा धर्मको प्रचार दुबै अवस्थामा तपाईंका लागि आवश्यक थियो अर्थात् أَوْلَمْ تَنْفَعْ यहाँ लुप्त छ ।

[3]अर्थात् तपाईंको शिक्षावाट उनी अवश्य शिक्षा ग्रहण गर्नेछन् जसका हृदयमा अल्लाहको भय हुनेछ । तिनीहरूमा अल्लाहका भय तथा आफ्ना सुधारका भावना अधिक शक्तिशाली हुनजानेछ ।

[4]अर्थात् यस शिक्षामा लाभ प्राप्त गर्नसक्ने छैनन् किनकि उनको कुफ्रमा दुराग्रह तथा अल्लाहको अवज्ञामा तत्परता प्रचलित रहन्छ ।

ثُمَّ لَا يَمُوتُ فِيهَا وَلَا يَحْيَىٰ ﴿١٣﴾

(१३) जहाँ त्यो न मर्नसक्ने छ न जीउने छ[1] (बरु प्राण निस्कनुको अवस्थामा रहिरहनेछ ।

قَدْ أَفْلَحَ مَن تَزَكَّىٰ ﴿١٤﴾

(१४) निःसन्देह उसले सफलता प्राप्त गऱ्यो, जो पवित्र भयो ।[2]

وَذَكَرَ اسْمَ رَبِّهِ فَصَلَّىٰ ﴿١٥﴾

(१५) तथा जसले आफ्ना प्रभुका नाम याद राख्यो नमाज़ पढ्दै रह्यो ।

بَلْ تُؤْثِرُونَ الْحَيَاةَ الدُّنْيَا ﴿١٦﴾

(१६) र तिमी त सांसारिक जीवनलाई श्रेष्ठता दिन्छौ ।

وَالْآخِرَةُ خَيْرٌ وَأَبْقَىٰ ﴿١٧﴾

(१७) तथा परलोक अत्यन्त सुखद एवं स्थायी छ ।[3]

---

[1]यसका विपरीत जो मात्र आफ्ना पापहरूको दण्ड भोग्नका लागि सामयिक रुपले नरक़मा रहिहालेका हुनेछन् उनीहरूलाई अल्लाह (तआ़ला) ले एक प्रकार मृत्यु दिनेछ, यहाँसम्मकि उनी आगोमा जलेर कोइला हुनेछन् । अनि अल्लाह अम्बिया आदिको सिफारिशबाट उनलाई समूहहरूका रुपमा नरक़बाट निकाल्नेछ उनलाई स्वर्गको नहरमा हालिनेछ । स्वर्गीय पनि उनीमाथि पानी हाल्नेछन् । जसबाट उनी यसप्रकार जीवित हुनेछन् जस्तै बाढीका कुडामा अन्य उम्रन्छ । (सहीह मुस्लिम किताबुल ईमान)

[2]जसले आफूलाई नैतिक पतनबाट तथा हृदयलाई शिर्क तथा अवज्ञाको मलिनताबाट पवित्र गरिहाल्यो ।

[3]किनकि संसार तथा त्यसको प्रत्येक वस्तु नश्वर छ जबकि परलोकको जीवन स्थायी तथा नित्य छ यसकारण चतुर व्यक्तिले नश्वर वस्तुलाई शेष रहने कुरोमाथि प्रधानता दिंदैन ।

إِنَّ هَٰذَا لَفِي الصُّحُفِ الْأُولَىٰ ﴿١٨﴾

(१८) यी कुरा पूर्वका पुस्तकहरूमा पनि छन् ।

صُحُفِ إِبْرَاهِيمَ وَمُوسَىٰ ﴿١٩﴾

(१९) (अर्थात्) इब्राहीम तथा मूसाका किताबहरूमा ।

## سُورَةُ الْغَاشِيَةِ

## सूरतुल ग़ाशिया-८८

सूरतुल ग़ाशिया मक्कामा अवतरित भयो तथा यसमा छब्बीस आयतहरु छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

هَلْ أَتَاكَ حَدِيثُ الْغَاشِيَةِ ﴿١﴾

(१) के तिमीलाई पनि लुकाउनेवाली (प्रलय) क़यामत को सूचना पुगेको छ ?[1]

وُجُوهٌ يَوْمَئِذٍ خَاشِعَةٌ ﴿٢﴾

(२) त्यस दिन धेरै अनुहार अपमानित हुनेछन् ।[2]

عَامِلَةٌ نَّاصِبَةٌ ﴿٣﴾

(३) (तथा) दुःखहरूबाट पीडित कष्टहरूमा हुनेछन् ।

---

**सूरतुल गाशिया:** केही रिवायतमा छ कि रसूलुल्लाह (सल्लल्लाहु अलैहि वसल्लम) जुमअःको नमाज़मा सूरतुल जुमअका साथ सूरतुल गाशिया पढ्ने गर्नुहुन्थ्यो (मुअत्ता इमाम मालिक, बाबुल किराअते फी सलातिल जुमुअः)

[1] هَـلْ अर्थमा छ قد का غَاشِيَةٌ ग़ाशिया, सित प्रलय छ । किनकि त्यसको भयानकताले पुरा सृष्टिलाई ढाक्नेछ ।

[2]अर्थात् काफ़िरहरूका अनुहार خَاشِعَةٌ निहुरेका तथा अपमानित हुनेछन् जस्तो नमाजी नमाज़को अवस्थामा अल्लाहको साम्नु विनम्रता तथा विनयका साथ निहुरेका हुन्छन् ।

[3] نَّاصِبَةٌ को अर्थ हो थाकेर लखतरान हुनु अर्थात् उनीहरूलाई यति कडा यातना हुनेछ कि उनको नराम्रो दशा हुनेछ । यसको एउटा अर्को भावार्थ यो हो कि संसारमा कर्म गरेर थाकेका हुनेछन् । अर्थात् धेरै कर्म गरिराखेका हुनेछन् । किन्तु ती कर्म असत्य धर्मानुसार अथवा विद्अतमा आधारित हुनेछन् यसकारण उपासना तथा कडा कर्महरूका उपरान्त पनि नरक़मा जानेछन् । जस्तो कि यस भावार्थका कारण माननीय इब्ने अब्बासले ﴿عَامِلَةٌ نَّاصِبَةٌ﴾ सित अभिप्राय इसाई लिएका छन् । (सहीह बुखारी तफ़सीर सुरतिल गाशिया)

تَصْلَىٰ نَارًا حَامِيَةً ﴿٤﴾

(४) उनी दन्केको अग्निमा जानेछन् ।

تُسْقَىٰ مِنْ عَيْنٍ آنِيَةٍ ﴿٥﴾

(५) तथा अत्यन्त गरम (उम्लिराखेको) स्रोतको पानी उनलाई पिलाइनेछ ।

لَّيْسَ لَهُمْ طَعَامٌ إِلَّا مِن ضَرِيعٍ ﴿٦﴾

(६) उनका लागि मात्र काँडादार वृक्षहरूका अन्यका अतिरिक्त केही खानेकुरो हुनेछैन ।[2]

لَّا يُسْمِنُ وَلَا يُغْنِي مِن جُوعٍ ﴿٧﴾

(७) जो न शरीरमा वृद्धि गर्नेछ तथा न भोक मेटाउनेछ ।

وُجُوهٌ يَوْمَئِذٍ نَّاعِمَةٌ ﴿٨﴾

(८) धेरै अनुहार त्यस दिन प्रसन्न एवं प्रफुल्लित हुनेछन् ।

لِّسَعْيِهَا رَاضِيَةٌ ﴿٩﴾

(९) आफ्ना कर्महरूका कारण प्रसन्न हुनेछन् ।

فِي جَنَّةٍ عَالِيَةٍ ﴿١٠﴾

(१०) उच्च स्वर्गमा हुनेछन् ।

لَّا تَسْمَعُ فِيهَا لَاغِيَةً ﴿١١﴾

(११) जहाँ कुनै अश्लील कुरा कानमा पर्नेछैन ।

فِيهَا عَيْنٌ جَارِيَةٌ ﴿١٢﴾

(१२) जहाँ (शीतल) जलस्रोत प्रवाहित हुनेछन् ।

فِيهَا سُرُرٌ مَّرْفُوعَةٌ ﴿١٣﴾

(१३) (तथा) त्यसमा अग्ला-अग्ला सिंहासन हुनेछन् ।

وَأَكْوَابٌ مَّوْضُوعَةٌ ﴿١٤﴾

(१४) तथा प्यालाहरू राखिएका हुनेछन् ।

وَنَمَارِقُ مَصْفُوفَةٌ ﴿١٥﴾

(१५) एक पंक्तिमा राखिएका तकियाहरू हुनेछन् ।

[1]यहाँ त्यो अति उम्लिराखेको अभिप्राय छ जसको गर्मी चरम सीमालाई पुगेको होस् (फ़तहुल क़दीर)

[2]यो एउटा काँडादार झाडी हो जुन सुकेपछि जनावर त्यसलाई खान रुचाउँदैनन् । जे पनि होस् यो पनि ज़क़्क़ूमको जस्तो एउटा अत्यन्त टर्रो दुर्गन्धित, स्वादहीन, अपवित्र खाना हुनेछ जो न शरीरको अङ्ग बन्नेछ न क्षुदा नै जानेछ ।

(१६) तथा कोमल कालीनहरू ओछ्याइएका हुनेछन् ।[1]

وَزَرَابِيُّ مَبْثُوثَةٌ ﴿١٦﴾

(१७) के यिनी ऊटहरूलाई हेर्दैनन् कि उनी कुन प्रकार पैदा गरिएका छन् ।[2]

أَفَلَا يَنظُرُونَ إِلَى الْإِبِلِ كَيْفَ خُلِقَتْ ﴿١٧﴾

(१८) तथा आकाशहरूलाई कसरी उच्च गरियो ।[3]

وَإِلَى السَّمَاءِ كَيْفَ رُفِعَتْ ﴿١٨﴾

(१९) तथा पर्वतहरूतिर कि कुन प्रकार गाडिइएका छन् ।[4]

وَإِلَى الْجِبَالِ كَيْفَ نُصِبَتْ ﴿١٩﴾



[1]यो स्वर्गवासीहरूको चर्चा हो जो नरकवासीहरूका विपरीत अति सुखी तथा प्रत्येक प्रकारका सुविधाहरूका भागी हुनेछन् । عَيْنٌ साधारण संज्ञा स्वरुप छ । अर्थात् अनेक जलस्रोत हुनेछन् نَمَارِق (तकियाहरू) का अर्थमा छन् । زَرَابِيُّ मुसनदहरू (कालीन, गद्दा, ओछ्यान مَبْثُوثَةٌ फैलिएको । अर्थात् यी मसनदहरू ठाउँ-ठाउँमा ओछ्याइएका हुनेछन् । स्वर्गवासी जहाँ आराम गर्नेछन् ।

[2]ऊट अरबमा साधारणतः थिए तथा यी अरबहरूको अधिकता सवारी यही थियो । त्यसकारण अल्लाहले उनैको चर्चा गरेर भन्नुभयो कि यिनका रचनामा विचार गर । अल्लाहले त्यसलाई कति ठूलो अस्तित्व प्रदान गरेको छ तथा कति शक्ति एवं बल त्यसमा राखेको छ यसका उपरान्त पनि तिनीहरू तिम्रा लागि वशीभूत छन् । तिमी त्यसमाथि जति चाहन्छौ भारी बोकाउ त्यसले इन्कार गर्नेछैन । तिम्रो अधीन भएर रहनेछ । यसका अतिरिक्त यसको मासु तिमीलाई खानका लागि तथा त्यसको दूध तिमीलाई पिउनका लागि एवं त्यसको ऊन गर्मी प्राप्त गर्ने काममा आउँछ ।

[3]अर्थात् कति उचाईमा आकाश छ । पाँच सय वर्षको यात्राको दूरीमा तैपनि स्तम्भ विना उभेको छ । त्यसमा कुनै कटाव तथा बाङ्गोपना छैन । साथै हामीले त्यसलाई ताराहरूबाट अलंकृत गरेका छौं ।

[4]अर्थात् कुन प्रकार धर्ती माथिका समान गाडिदिएको छ ताकि धर्ती नहल्लोस् । साथै त्यसमा खनिज तथा अन्य लाभ छन् जो यसका अतिरिक्त छन् ।

(२०) तथा धर्तीतिर, कि कुन प्रकार ओछ्याइएको छ ।[1]

وَإِلَى الْأَرْضِ كَيْفَ سُطِحَتْ ﴿٢٠﴾

(२१) त तपाईंले शिक्षा दिँदै गर्नुस् किनकि तपाईं केवल शिक्षा दिनेवाला हुनुहुन्छ ।[2]

فَذَكِّرْ إِنَّمَا أَنْتَ مُذَكِّرٌ ﴿٢١﴾

(२२) तपाईं उनीमाथि कुनै दारोगा त हुनुहुन्न ।[3]

لَسْتَ عَلَيْهِمْ بِمُصَيْطِرٍ ﴿٢٢﴾

(२३) परन्तु जो व्यक्ति विमुख हुन्छ तथा कुफ्र गर्दछ ।

إِلَّا مَنْ تَوَلَّىٰ وَكَفَرَ ﴿٢٣﴾

(२४) त्यसलाई अल्लाह (तआ़ला) ले अत्यन्त कठोर यातना दिनेछ ।[4]

فَيُعَذِّبُهُ اللَّهُ الْعَذَابَ الْأَكْبَرَ ﴿٢٤﴾

[1]अर्थात् कुन प्रकार उसलाई बराबर गरेर मनुष्यका लागि बस्ने योग्य बनाएको छ । त्यो त्यसमाथि हिंड्डुल गर्छ, व्यापार गर्दछ तथा उच्च भवन निर्माण गर्दछ ।

[2]अर्थात् तपाईंको कर्तव्य केवल शिक्षा दिनु एवं धर्मको प्रचार तथा आमन्त्रण हो । यसका अतिरिक्त अथवा यसभन्दा अधिक होइन ।

[3]कि उनीहरूलाई ईमान स्वीकार गर्नमा बाध्य गर्नुस् । केही विदहरू भन्छन् कि यो हिज्रतभन्दा पहिलेको आदेश हो । जो सैफ़को आयतबाट निरस्त छ । किनकि त्यसका पश्चात नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले भन्नुभयो :

«أُمِرْتُ أَنْ أُقَاتِلَ النَّاسَ حَتَّى يَقُولُوا : (لَا إِلَهَ إِلَّا اللهُ) فَإِذَا قَالُوهَا، عَصَمُوا مِنِّي دِمَاءَهُمْ وَأَمْوَالَهُمْ إِلَّا بِحَقِّهَا، وَحِسَابُهُمْ عَلَى اللهِ» .

"मलाई आदेश दिइएको छ कि म मानिसहरूसित लडूँ यहाँसम्मकि उनीहरू लाइलाहा इल्लल्लाहलाई स्वीकार गरिहालून् । जब उनीहरूले यो मानिलिनेछन् त उनीहरूले मबाट आफ्ना रक्त तथा मालहरूलाई बचाइहाले इस्लामका अधिकारका अतिरिक्त (जो यदि हाम्रो ज्ञानमा आएन भने) त्यसको हिसाब अल्लाहमाथि छ ।" (सहीह अलबुख़ारी, बाबु बजुबिज जक़ात, मुस्लिम किताबुल ईमान, बाबुल अम्रे बि कितालिन्तासे हत्ता यकूल ........)

[4]अर्थात् नरकको स्थाई यातना ।

إِنَّ إِلَيْنَآ إِيَابَهُمْ ﴿٢٥﴾

(२५) नि:सन्देह हामीतिर फर्कनुपर्नेछ ।

ثُمَّ إِنَّ عَلَيْنَا حِسَابَهُم ﴿٢٦﴾

(२६) अनि नि:सन्देह उनीसित हिसाब लिनु हाम्रो दायित्व हो ।[1]

## सूरतुल फ़ज्र-८९

سُورَةُ الفَجْرِ

सूरतुल फज़्र मक्कामा अवतरित भयो यसमा तीस आयतहरु छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

وَالْفَجْرِ ﴿١﴾

(१) सौगन्ध छ फज़्रको ।[2]

وَلَيَالٍ عَشْرٍ ﴿٢﴾

(२) तथा दस रातहरूको ।[3]

وَالشَّفْعِ وَالْوَتْرِ ﴿٣﴾

(३) तथा सम एवं विषयमको ।[4]

---

[1]प्रसिद्ध छ कि यसका उत्तरमा اللَّهُمَّ حَاسِبْنَا حِسَابًا يَسِيرًا पढियो । यो दुआ नबी (सल्लल्लाहु अलैहि व सल्लम) बाट सिद्ध छ जुन उहाँ आफ्ना केही नमाज़हरूमा पढ्नु हुन्थ्यो जस्तो कि सूरतुल इंशिक़ाक़मा गुज्रयो किन्तु यस आयतका उत्तरमा यो पढ्नु उहाँबाट सिद्ध छैन ।

[2]**सुरतुल फ़ज्र:** यसबाट अभिप्राय साधारण फज़्र छ कुनै विशेष दिनको फज़्र होइन ।

[3]यसबाट अधिकांश व्याख्याकारहरूका विचारमा "जिल हिज़्जा" का आरम्भिक दस रातहरू अभिप्राय छन् । जसको प्रधानता हदीसहरूमा प्रमाणित छ । नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले भन्नुभयो 'जिल्हिज़्जा' का दस दिनहरूमा गरिएका सत्कर्म अल्लाहलाई सर्वाधिक प्रिय छन् यहाँसम्मकि अल्लाहका मार्गमा ज़िहाद पनि त्यति प्रिय छैन अतिरिक्त त्यस ज़िहादका जसमा मानिस शहीद (बलिदान) नै हुनजाओस् । (अल बुख़ारी किताबुल ईदैन बाबु फज़्लिल अमले फी अय्यामित तशरीक़)

[4]यसबाट अभिप्राय सम तथा विषम संख्या हो अथवा ती वस्तुहरू जो सम तथा विषम हुन्छन् । केही विदहरू भन्छन् कि वास्तवमा यो सृष्टिको शपथ हो किनकि सृष्टि सम (जोडा) अथवा विषम (एक्लो) छ । यसमा अतिरिक्त छैन । (ऐसरुत्तफ़ासीर)

(४) तथा रात्रि त्यो हिंड्न थाल्छ ।[1] وَالَّيْلِ اِذَا يَسْرِ ۝

(५) के उनमा बुद्धिमानीहरूका लागि पर्याप्त सौगन्ध छ ?[2] هَلْ فِيْ ذٰلِكَ قَسَمٌ لِّذِيْ حِجْرٍ ۝

(६) के तपाईंले देख्नुभएन कि तपाईंका प्रभुले आदहरूका साथ के गऱ्यो ?[3] اَلَمْ تَرَ كَيْفَ فَعَلَ رَبُّكَ بِعَادٍ ۝

(७) स्तम्भहरूवाला इरमका साथ ।[4] اِرَمَ ذَاتِ الْعِمَادِ ۝

[1] अर्थात् जब आउँछ तथा जब जान्छ किनकि سَيْر (चल्नु) दुबै अवस्थामा हुन्छ । आउनुमा पनि तथा जानुमा पनि ।

[2] ذٰلِكَ सित जुन कुराहरूको सौगन्ध खाइएको छ उनीतिर संकेत छ । अर्थात् के यिनको सौगन्ध बुद्धिमानीहरूका लागि पर्याप्त छैन ? حِجْر को अर्थ हुन्छ रोक्नु, मना गर्नु । मानवीय बुद्धि पनि त्यसलाई गलत कर्महरूबाट रोक्दछ । यसकारण बुद्धिलाई पनि حِجْر हिज्र भनिन्छ । जस्तो यसै अर्थका आधारमा त्यसलाई نُهْيَة पनि भन्दछन् । सौगन्धको उत्तर لَيُعَذِّبُنَّ हो, किनकि मक्की सूरतहरूमा आस्थाका आधारमा सुधारमा अधिक जोड दिइएको छ । केही ज्ञाताहरूका विचारले सौगन्धको उत्तर अगाडिका शब्द ﴿إِنَّ رَبَّكَ لَبِالْمِرْصَادِ﴾ हुन् । अगाडि प्रमाण स्वरुप केही ती जातिहरूको चर्चा गरिंदैछ जो झूठलाउनु तथा विरोध गर्नका कारण नाश तथा ध्वस्त गरिएका थिए । उद्देश्य मक्कावासीहरूलाई सावधान गर्नु हो कि यदि तिमीले हाम्रा रसूललाई झुठ्लायौ भने तिमीलाई पनि यसैप्रकार समात्न सकिन्छ जस्तो विगत जातिहरूलाई समातियो ।

[3] उनीतिर माननीय हूद ईशदूत बनाइएर पठाइएका थिए । उनले झुठ्लाए अन्ततः अल्लाहले तीब्र हावाको प्रकोप उनीमाथि उताऱ्यो जो निरन्तर सात रात तथा आठ दिन जारी रह्यो र उनीहरूलाई ध्वस्त गरिदयो । (अल-हाक्क़:,७-१०)

[4] إِرَم यो عَاد को वर्णन हो अथवा त्यसबाट साटो छ । यो आद जातिका दादाको नाम हो । उनको वंशक्रम हो, आदपुत्र औस पुत्र एरम पुत्र साम पुत्र नूह (फ़तहुल क़दीर) यसको उद्देश्य यो बताउनु हो कि यो प्रथम आद हो ذات العماد स्तम्भहरूवालाबाट संकेत, उनको शक्ति बल तथा अतिकाय हुनुतिर छ ।

यसका अतिरिक्त उनी भवन निर्माणमा पनि दक्ष थिए । तथा अति दृढ मूलमा भव्य भवन निर्माण गर्दथे । ذات العماد मा दुबै भावार्थ सम्मिलित हुनसक्छन् ।

الَّتِي لَمْ يُخْلَقْ مِثْلُهَا فِي الْبِلَادِ ⑧

(८) जसका जस्ता मानिस (अन्य कुनै नगर तथा) देशहरूमा पैदा गरिएनन् ।[1]

وَثَمُودَ الَّذِينَ جَابُوا الصَّخْرَ بِالْوَادِ ⑨

(९) तथा समुदायहरूका साथ जसले घाटीहरूमा ठूला-ठूला पत्थर काटेका थिए ।[2]

وَفِرْعَوْنَ ذِي الْأَوْتَادِ ⑩

(१०) तथा फिरऔनका साथ जो खूँटहरूवाला थियो ।[3]

الَّذِينَ طَغَوْا فِي الْبِلَادِ ⑪

(११) ती सबैले नगरहरूमा टाउको उठाएका थिए ।

فَأَكْثَرُوا فِيهَا الْفَسَادَ ⑫

(१२) तथा निकै उपद्रव मच्चाएका थिए ।

فَصَبَّ عَلَيْهِمْ رَبُّكَ سَوْطَ عَذَابٍ ⑬

(१३) अन्तमा तिम्रा प्रभुले ती सबैमाथि प्रकोपको कोर्रा वर्षायो ।[4]

إِنَّ رَبَّكَ لَبِالْمِرْصَادِ ⑭

(१४) नि:सन्देह तिम्रो प्रभु घातमा छ ।[5]

---

[1]तिमीहरू जस्तो अतिकाय तथा शक्तिशाली जाति कोही पैदा भएन । यिनीहरू भन्ने गर्दथे ﴿مَنْ أَشَدُّ مِنَّا قُوَّةً﴾ (हा.मीम.सजदा-१५) हामीभन्दा अधिक शक्तिशाली को छ ?

[2]यो माननीय सालेहको जाति थियो । अल्लाहले त्यसलाई पत्थर तास्नुको विशेष कला तथा शक्ति प्रदान गरेको थियो । यहाँसम्मकि यिनी पर्वतहरूलाई तासेर तिनमा आफ्ना आवास बनाउँथे जस्तो कि कुर्आनले (अश्शूअरा-१४९) मा भनेको छ । ﴿وَتَنْحِتُونَ مِنَ الْجِبَالِ بُيُوتًا فَارِهِينَ﴾

[3]यसको अभिप्राय यो हो कि ठूलो सेनाहरू भएको थियो । जससित खेमाहरूको अधिकता थियो जसलाई खूँटा (किल्ला) गाडेर खडा गरिन्थ्यो । अथवा त्यसको क्रुरता एवं अत्याचारतिर संकेत छ कि खुँटाहरूद्वारा उनलाई यातनारू दिन्थ्यो । (फ़तहुल क़दीर)

[4]अर्थात् उनीमाथि आकाशबाट आफ्नो प्रकोप उतारेर उनीहरूलाई नष्ट तथा बर्बाद गरिदियो अथवा उनीहरूलाई शिक्षाप्रद परिणामसित मिलाइदियो ।

[5]अर्थात् सबै सृष्टिका कर्म हेरिराखेको छ तथा तदानुसार त्यो संसारमा राम्रो-नराम्रो प्रतिफल दिन्छ ।

فَأَمَّا الْإِنسَانُ إِذَا مَا ابْتَلَاهُ رَبُّهُ فَأَكْرَمَهُ وَنَعَّمَهُ فَيَقُولُ رَبِّي أَكْرَمَنِ ﴿١٥﴾

(१५) मनुष्य (को यो हाल छ) कि जब त्यसको प्रभु त्यसको परीक्षा लिन्छ तथा मान तथा उपहार दिन्छ, त त्यो भन्नथाल्छ कि मेरो प्रभुले मेरो सम्मान गऱ्यो ।[1]

وَأَمَّا إِذَا مَا ابْتَلَاهُ فَقَدَرَ عَلَيْهِ رِزْقَهُ فَيَقُولُ رَبِّي أَهَانَنِ ﴿١٦﴾

(१६) तथा जब त्यसले त्यसको परीक्षा लिंदै त्यसको जीविकालाई कम गरिदिन्छ, त त्यो भन्नथाल्छ कि मेरो प्रभुले मेरो अपमन गऱ्यो ।[2]

كَلَّا بَل لَّا تُكْرِمُونَ الْيَتِيمَ ﴿١٧﴾

(१७) यस्तो कदापि छैन बरु (कुरो यो हो कि) तिमीहरू (नै) अनाथहरूको आदर गर्दैनौ ।[4]

[1]अर्थात् जब अल्लाह कसैलाई आजीविका तथा धन प्राचुर्य प्रदान गर्दछ त त्यो आउनो विषयमा यस भ्रममा पर्नजान्छ कि अल्लाह त्यसमाथि बडो दयालु छ जबकि यो प्राचुर्य परीक्षा तथा परखका लागि हुन्छ ।

[2]अर्थात् त्यसले अभावमा पारिदिन्छ तथा परीक्षा लिन्छ त अल्लाहका बारेमा मिथ्या सन्देह गर्नथाल्छ ।

[3]अर्थात् कुरा यस्तो छैन जस्तो मानिस बुझ्दछन् । अल्लाह धन आफ्ना प्रिय भक्तहरूलाई पनि दिन्छ तथा अप्रिय मानिसहरूलाई पनि । अभावमा पनि आफ्ना निकटका तथा अन्य दुबैलाई ग्रस्त गर्दछ । जब अल्लाह धन दिन्छ त त्यसको कृतज्ञता देखाओस्, दरिद्रता आउँछ भने धैर्यधारण गरोस् ।

[4]अर्थात् त्यससँग राम्रो व्यवहार गर्दैनन् जसका तिनी पात्र छन् । नबी (सल्लल्लाहु अलैहि व सल्लम) को कथन छ । "त्यो घर सबभन्दा उत्तम छ जसमा अनाथका साथ राम्रो व्यवहार गरिन्छ तथा त्यो घर सबभन्दा नराम्रो छ जसमा अनाथसित दुर्व्यवहार गरिन्छ ।" अनि आफ्नो औंलातिर संकेत गरी भन्नुभयो म तथा अनाथको पोषक स्वर्गमा यसप्रकार सँगसँगै हुनेछन् जस्तै यी दुई औंला साथ मिलेका छन् । (अबू दाऊद, किताबुल अदब, बाबुन फी जम्मिल यतीमें)

وَلَا تَحٰٓضُّوْنَ عَلٰی طَعَامِ الْمِسْكِيْنِ ﴿١٨﴾

(१८) तथा निर्धनहरूलाई खुवाउन एक-अर्कालाई प्रेरणा दिँदैनन् ।

وَتَاْكُلُوْنَ التُّرَاثَ اَكْلًا لَّمًّا ﴿١٩﴾

(१९) तथा (मृतकहरूको) उत्तराधिकार समेटेर खान्छन् ।[1]

وَّتُحِبُّوْنَ الْمَالَ حُبًّا جَمًّا ﴿٢٠﴾

(२०) तथा धनसित अत्याधिक प्रेम गर्दछौ ।[2]

كَلَّآ اِذَا دُكَّتِ الْاَرْضُ دَكًّا دَكًّا ﴿٢١﴾

(२१) निःसन्देह जुन समय[3] धर्ती कुटी-कुटी बिल्कुलै (बराबर) समतल पारिदिइनेछ ।

وَّجَآءَ رَبُّكَ وَالْمَلَكُ صَفًّا صَفًّا ﴿٢٢﴾

(२२) तथा तिम्रो प्रभु (स्वयं) आउनेछ तथा फरिश्ताहरू पंक्तिवद्ध भएर आउनेछन् ।[4]

وَجِایْٓءَ يَوْمَئِذٍۢ بِجَهَنَّمَ ۙ يَوْمَئِذٍ

(२३) तथा जुन दिन नरक् पनि ल्याइनेछ[5] त्यसदिन मनुष्यले शिक्षा ग्रहण

---

[1]अर्थात् जसरी प्राप्त होस् वैधानिक रुपले अथवा अवैधानिक لَمًّا को अर्थ جَمْعًا हो ।

[2] جَمًّا को अर्थ हो अत्याधिक ।

[3]अथवा तिम्रो कर्म यस्तो हुनुपर्छ जसको चर्चा भयो, किनकि एक समय आउनेवाला छ जब..........

[4]भनिन्छ कि जब फरिश्ताहरू केयामतका दिन त प्रत्येक आकाशका फरिश्ताहरूको एउटा पंक्ति हुनेछ । यसप्रकार सात-सात पंक्ति हुनेछन्, जो धर्तीलाई घेरिहाल्नेछन् ।

[5]सत्तरी हजार लगामहरूका साथ नरक् जकडिएको हुनेछ तथा प्रत्येक लगामका साथ सत्तरी हजार फरिश्ता हुनेछन् । जो त्यसलाई तानिरहेका हुनेछन् । (सहीह मुस्लिम, किताबुल जन्नः, बाबुन् फी शिद्दते हर्रे नारे जहन्नम व बुअदे कअरिहा, तिर्मिजी, अववाबु सिफ्ते जहन्नम, बाबु मा जाअ फी सिफातिन नार, त्यसलाई अर्श (सिंहासन) को बायाँ दिशामा उभ्याइनेछ, जसलाई देखेर सबै समीपवर्ती फरिश्ता तथा घूँडा टेकी नत्मस्तक हुनेछन् तथा يَا رَبِّ ! نَفْسِي نَفْسِي पुकार्नेछन् (फ़तुहुल क़दीर)

يَتَذَكَّرُ الْإِنسَانُ وَأَنَّىٰ لَهُ الذِّكْرَىٰ ﴿٢٣﴾

गर्नेछ, परन्तु आज शिक्षा ग्रहणको लाभ कहाँ ?[1]

يَقُولُ يَا لَيْتَنِي قَدَّمْتُ لِحَيَاتِي ﴿٢٤﴾

(२४) त्यसैले भन्नेछ कि काश, कि मैले यस जीवनका लागि केही (पुण्यका कार्य) पहिलादेखि नै गरेको भए ।[2]

فَيَوْمَئِذٍ لَّا يُعَذِّبُ عَذَابَهُ أَحَدٌ ﴿٢٥﴾

(२५) त आज (अल्लाह) का यातनाहरू जस्तो यातना कसैको हुनेछैन ।

وَلَا يُوثِقُ وَثَاقَهُ أَحَدٌ ﴿٢٦﴾

(२६) न त्यसका बन्धनका जस्तो कसैको बन्धन हुनेछ ।[3]

يَا أَيَّتُهَا النَّفْسُ الْمُطْمَئِنَّةُ ﴿٢٧﴾

(२७) हे सान्त्वना भएका आत्मा ।

ارْجِعِي إِلَىٰ رَبِّكِ رَاضِيَةً مَّرْضِيَّةً ﴿٢٨﴾

(२८) तिमी आफ्ना प्रभुतिर[4] फर्केर हिंड, यसप्रकार कि तिमी त्यससँग प्रसन्न त्यो तिमीसँग प्रसन्न ।

[1]अर्थात् यो भयावह दृश्य देखेर मनुष्यका आँखा खुल्नेछन् तथा आफ्ना कुफ्र एवं अवज्ञामा लज्जित हुनेछ, किन्तु त्यसदिन यस लज्जा तथा शिक्षा ग्रहणको कुनै लाभ हुनेछैन ।

[2]अर्थात् यो पश्चाताप तथा खेदको प्रदर्शन यसै लज्जाको अंश हो जो त्यसदिन लाभप्रद हुनेछैन ।

[3]त्यसदिन सबै अधिकार केवल एक अल्लाहका हातमा हुनेछन् । अरु कसैलाई त्यसका सामु साँझ लिनुको साहस हुनेछैन । यहाँसम्मकि त्यसको आज्ञा बिना कसैले कसैको सिफारिश पनि गर्नसक्ने छैन । यस्तो दशामा काफ़िरहरूलाई जुन यातना हुनेछ तथा जुनप्रकार उनी अल्लाहका बन्धनमा जकडिएका हुनेछन्, त्यसलाई यहाँ सोच्न पनि सकिन्न कि त्यसको केही अनुमान लगाउन सकियोस् । यो त अपराधी तथा अत्याचारीहरूको दशा हुनेछ । किन्तु ईमानवाला तथा आज्ञापालकहरूको स्थिति यसभन्दा सर्वथा भिन्न हुनेछ जस्तो कि आगामी आयतहरूमा छ ।

[4]अर्थात् उनका प्रतिफल तथा ती उपहारहरूतिर जो उसले स्वर्गमा आफ्ना भक्तहरूका लागि तयार गरेको छ । केही भन्दछन् कि क़ेयामतका दिन भनिनेछ । केही भन्दछन् कि मृत्युका साथ पनि फरिश्ताहरू शुभ-सूचना दिन्छन् । यसैप्रकार केयामतका दिन पनि त्यससित भनिनेछ जो यहाँ चर्चित छ ।

فَادْخُلِي فِي عِبَادِي ﴿٢٩﴾

(२९) मेरो विशेष भक्तहरूमा सम्मिलित भइहाल ।

وَادْخُلِي جَنَّتِي ﴿٣٠﴾

(३०) तथा मेरो स्वर्गमा गइहाल ।

سُورَةُ الْبَلَدِ

## सूरतुल बलद-९०

सूरतुल बलद मक्कामा अवतरित भएको तथा यसमा बीस आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

لَا أُقْسِمُ بِهَٰذَا الْبَلَدِ ﴿١﴾

(१) म यस नगरको सौगन्ध खान्छु ।[1]

وَأَنتَ حِلٌّ بِهَٰذَا الْبَلَدِ ﴿٢﴾

(२) तिम्रा लागि यस नगरमा युद्ध मान्य हुनेवाला छ ।[2]



हाफ़िज़ इब्ने कसीरले इब्ने असाकिरका सन्दर्भबाट भनेका छन् कि नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले एउटा व्यक्तिलाई यो दुआ पढ्नुको आदेश दिनुभयो ।

«اللَّهُمَّ إِنِّي أَسْأَلُكَ نَفْسًا، بِكَ مُطْمَئِنَّةً، تُؤْمِنُ بِلِقَائِكَ، وَتَرْضَى بِقَضَائِكَ وَتَقْنَعُ بِعَطَائِكَ» (इब्ने कसीर)

[1] **सूरतुल बलद:** यसबाट अभिप्राय मक्का नगर हो जसमा यस सूरतका अवतरणका समय माननीय नबी (सल्लल्लाहु अलैहि व सल्लम) को निवास थियो । उहाँको जन्मभूमि पनि यही नगर थियो । अर्थात् अल्लाहले उहाँको जन्मभूमि तथा निवासस्थानको शपथ लिएको छ जसबाट त्यसको प्रतिष्ठाको अधिक स्पष्टीकरण हुन्छ ।

[2] यो संकेत हो त्यस समयतिर जब मक्का विजय भयो । त्यस समय यस पवित्र नगरीमा अल्लाहले लडाईलाई वैध गरिदिएको थियो, जबकि त्यसमा लडाईंको अनुमति छैन । जस्तो हदीसमा छ नबी *(सल्लल्लाहु अलैहि व सल्लम)* ले भन्नुभयो यस नगरलाई अल्लाहले त्यस समयदेखि आदरणीय बनाएको छ, जबदेखि आकाश तथा धर्ती बनायो । अनि यो अल्लाहको निर्धारित सम्मानका कारण प्रलयसम्म आदरणीय छ, न यसको वृक्ष काटियोस् न त्यसका काँडा उखेलिऊन् । मेरो लागि यसलाई केवल एक पलका लागि वैध (हलाल) गरिएको थियो । आज त्यसको आदर पुन: त्यसैप्रकार फर्क्यो जस्तो हिजो थियो----- यदि यहाँ कुनै लडाईंका लागि प्रमाण स्वरुप मेरो लडाईं पेश गर्दछ भने त्यससित भन कि

وَوَالِدٍ وَّمَا وَلَدَ ③

(३) तथा सौगन्ध छ मानवीय पिता तथा सन्तानको ।[1]

لَقَدْ خَلَقْنَا الْإِنْسَانَ فِيْ كَبَدٍ ④

(४) निःसन्देह हामीले मनुष्यलाई (अत्यन्त) परिश्रममा पैदा गरेका छौं ।[2]

أَيَحْسَبُ أَنْ لَّنْ يَّقْدِرَ عَلَيْهِ أَحَدٌ ⑤

(५) के त्यो विचार गर्दछ कि त्यो कसैका वंशमा नै छैन ?[3]

يَقُوْلُ أَهْلَكْتُ مَالًا لُّبَدًا ⑥

(६) भन्दै (हिंड्छ) कि मैले त अत्याधिक माल खर्च गरिहालें ।[4]



अल्लाहका रसूललाई यसको अनुमति अल्लाहले दिएको थियो । जबकि उसले तिमीलाई यो अनुमति दिएन । (सहीह अल बुखारी, किताबुल इल्म, बाबु लियो बल्लिगिश शाहिदु मिनकुम अल गाइबा, मुस्लिम किताबुल हज्ज)

यस आधारमा अर्थ हुनेछ कि وَأَنْتَ حِلٌّ بِهٰذَا الْبَلَدِ فِي الْمُسْتَقْبَل केही विदले यसको अर्थ यो लगाएका छन् कि तिमी यस नगरको निवासी हौ । किन्तु इमाम शौकानी भन्नुहुन्छ यो अर्थ त्यसैसमय सही हुनेछ जब अरबको भाषाबाट यो सिद्ध हुन्छ कि حل हिल्लुन (उत्र्नु तथा रहनु) का अर्थमा हुन्छ । यो मध्यवर्ती वाक्य हो ।

[1]केही ज्ञाताहरूले यसको अर्थ आदरणीय आदम तथा उनको सन्तान लिएका छन् तथा केहीका विचारले यो साधारण हो प्रत्येक पिता तथा सन्तान यसमा सम्मिलित छन् ।

[2]अर्थात् यसको जीवन कष्ट, आपित्त तथा दुःखहरूले भरिएको छ । इमाम तबरीले यही अर्थ लिएका छन् । यो सौगन्धको उत्तर हो ।

[3]अर्थात् कोही त्यसको पकड गर्नुमा सामर्थ्य छैन ?

[4]لُبَدًا अत्याधिक अर्थात् संसारका विषयमा तथा बेकार वस्तुका लागि निकै पैसा उडाउँछ अनि गर्वका साथ मानिसहरूसित भन्दै हिंड्दछ ।

أَيَحْسَبُ أَن لَّمْ يَرَهُۥٓ أَحَدٌ ⑦
(७) के (यसप्रकार) ठान्दछ कि कसैले उसलाई देखेकै छैन ?[१]

أَلَمْ نَجْعَل لَّهُۥ عَيْنَيْنِ ⑧
(८) के हामीले त्यसका दुई आँखा बनाएनौं ?[२]

وَلِسَانًا وَشَفَتَيْنِ ⑨
(९) तथा एउटा जिब्रो एवं दुईटा ओठ (बनाएनौं) ?[३]

وَهَدَيْنَٰهُ ٱلنَّجْدَيْنِ ⑩
(१०) तथा उसलाई दुबै मार्ग देखाइदियौं ।[४]

فَلَا ٱقْتَحَمَ ٱلْعَقَبَةَ ⑪
(११) त त्यसबाट हुनसकेन कि घाटीमा प्रवेश गर्दथ्यो ।[५]

[१]यसप्रकार अल्लाहको अवज्ञामा धन खर्च गर्दछ तथा ठान्दछ कि कसैले देखिराखेको छैन ? जबकि अल्लाह सबै देखिराखको छ । जसका लागि त्यसले प्रतिफल दिनेछ । अगाडि अल्लाह आफ्ना केही पुरस्काहरूको चर्चा गरिराखेको छ ताकि यस्ता मानिसले शिक्षा प्राप्त गरुन् ।

[२]जसबाट त्यो देख्दछ ।

[३]त्यो आफ्ना मुख (जिब्रो) ले बोल्दछ तथा आफ्नो मनको कुरा व्यक्त गर्दछ । ओठहरूबाट बोल्न तथा खानमा सहायता लिन्छ । यसका अतिरिक्त त्यो त्यसका अनुहार र मुखका लागि शोभाको पनि कारण छ ।

[४]अर्थात् पुण्यको पनि तथा पापको पनि, कुफ्रको पनि ईमानको पनि, सौभाग्यको पनि दुर्भाग्यको पनि, जस्तै (सूरः अद्दहर-३) मा भन्यो :

﴿إِنَّا هَدَيْنَٰهُ ٱلسَّبِيلَ إِمَّا شَاكِرًا وَإِمَّا كَفُورًا﴾

نَجْدٌ को अर्थ उच्च स्थान हो । यसकारण केही विदहरूले यो अनुवाद गरेका छन् हामीले मनुष्यलाई (माताको) दुई छातीहरू बताइदियौं कि त्यसले स्तनबाट बाल्यकालमा आफ्नो खाद्य प्राप्त गरोस् किन्तु प्रथम भावार्थ अधिक सही छ ।

[५]عَقَبَةٌ घाटीलाई भन्दछन् । अर्थात् त्यो माग जो पर्वतमा हुन्छ त्यो साधारणतया दुर्गम हुन्छ । यो वाक्य नकारात्मक प्रश्नका भावमा छ अर्थात् के त्यसले घाटीमा प्रवेश गरेन ? अर्थ हो, गरेन । यो एउटा उदाहरण हो त्यस परिश्रम तथा प्रयासको जो पुण्यका कर्मको लागि एउटा मानिसलाई शैतानी सन्देह तथा मनोकामनाहरूका विरुद्ध गर्नुपर्दछ ।

وَمَآ أَدۡرَىٰكَ مَا ٱلۡعَقَبَةُ ١٢

(१२) तथा तिमीले के बुझ्यौ कि घाटी हो के ?

فَكُّ رَقَبَةٍ ١٣

(१३) कुनै गर्दन (दास-दासी) लाई स्वतन्त्र गर्नु ।

أَوۡ إِطۡعَٰمٞ فِي يَوۡمٖ ذِي مَسۡغَبَةٖ ١٤

(१४) अथवा भोकवाला दिनमा खाना खुवाउनु ।

يَتِيمٗا ذَا مَقۡرَبَةٍ ١٥

(१५) कुनै निकट सम्बन्धी अनाथलाई ।

أَوۡ مِسۡكِينٗا ذَا مَتۡرَبَةٖ ١٦

(१६) अथवा भूमिमा परेको दरिद्रलाई ।[1]

ثُمَّ كَانَ مِنَ ٱلَّذِينَ ءَامَنُواْ وَتَوَاصَوۡاْ بِٱلصَّبۡرِ وَتَوَاصَوۡاْ بِٱلۡمَرۡحَمَةِ ١٧

(१७) अनि ती मानिसहरूमध्ये हुन्थ्यो जसले ईमान स्वीकार गरे[2] तथा एक अर्कालाई धैर्यको एवं दया गर्नुको वसीयत (निर्देश) गर्दछन् ।[3]

أُوْلَٰٓئِكَ أَصۡحَٰبُ ٱلۡمَيۡمَنَةِ ١٨

(१८) यिनै मानिस हुन् दायाँ हातवाला ।

---

पर्दछ । जस्तै घाटीमा उक्लिनका लागि कडा परिश्रमको आवश्यकता हुन्छ । (फ़तहुल क़दीर)

[1] مَسْغَبَة، مَجَاعَة भोक يَوْمٍ ذِي مَسْغَبَةٍ भोकको दिन ذَا مَتْرَبَةٍ (धूलोवाला) अर्थात् जो दरिद्रता तथा गरीबीका कारण धूलो (धर्ती) मा परेको हुन्छ । त्यसको घरबार पनि नहोस् । अभिप्राय यो हो कि कुनै दास-दासीलाई मुक्त गराइदिनु, कुनै भोकालाई, सम्वन्धी अनाथ तथा गरीबलाई खाना खुवाइदिनु । यो दुष्पार घाटीमा प्रवेश गर्नु हो । जसद्वारा मानिस नरकबाट बाँचेर स्वर्गमा पुग्नेछ । अनाथको पोषण त्यसै ठूलो पुण्यको कार्य हो किन्तु यदि सम्बन्धी पनि छ भने त्यसका पालन पोषणको दुई गुना पुण्य छ । एउटा दानको दोस्रो सम्बन्ध जोड्नुको । यसैप्रकार दासमुक्त गर्नुको पनि बडो प्रधानता हदीसहरूमा आएको छ । वर्तमान युगमा कुनै ऋणिलाई ऋणबाट मुक्त गरिदिनु त्यसको एउटा रुप हुनसक्दछ । यो पनि एकप्रकार فَكُّ رَقَبَةٍ हो ।

[2] यसबाट विदित भयो कि उपरोक्त कर्म त्यसै समय लाभप्रद तथा परलौकिक सौभाग्यको कारण हुनेछन् जब उनलाई गर्नेवाला ईमान भएको हुनेछ ।

[3] ईमान भएकाहरूको विशेषता हो कि उनी एक-अर्कालाई धैर्य तथा दयाको निर्देश दिन्छन् ।

وَالَّذِينَ كَفَرُوا بِآيَاتِنَا هُمْ أَصْحَابُ الْمَشْأَمَةِ ⑲

(१९) तथा जसले हाम्रा आयतहरूका साथ कुफ़ गरे, तिनै मानिस हुन् बायाँ हातवाला ।

عَلَيْهِمْ نَارٌ مُؤْصَدَةٌ ⑳

(२०) तिनैका लागि अग्नि हुनेछ जो चारैतिरबाट घेरेको हुनेछ ।[१]

## सूरतुश शम्स-९१

سُورَةُ الشَّمْسِ

सूरतुश शम्स मक्कामा अवतरित भएको तथा यसमा पन्ध्र आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

وَالشَّمْسِ وَضُحَاهَا ①

(१) सौगन्ध छ सूर्यको एवं त्यसको घामको ।[२]

وَالْقَمَرِ إِذَا تَلَاهَا ②

(२) सौगन्ध छ चन्द्रमाको जब त्यसको पछाडि आउँछ ।[३]

وَالنَّهَارِ إِذَا جَلَّاهَا ③

(३) सौगन्ध छ दिनको जब सूर्यलाई प्रकट गर्दछ ।[४]



---

[१] مُؤْصَدَةٌ को अर्थ مُغْلَقَةٌ हो (बन्द) अर्थात् उनलाई आगोमा हालेर चारैतिरबाट वन्द गरिदिइनेछ । ताकि एक त आगोको पूरा तपन उनलाई पुगोस्, अर्को उनी कही भागेर जान नसकून् ।

[२] सूरतुश शम्स अथवा त्यसका प्रकाशको अथवा ضُحًى सित अभिप्राय दिन हो अर्थात् सूर्य एवं दिनको सम्वन्ध ।

[३] अर्थात् जव सूर्यास्तका पश्चात त्यो उदय हुन्छ । जस्तो पहिला आधा महिनामा यस्तो हुन्छ ।

[४] अथवा अँध्यारोलाई धपाओस् । अँध्यारोको चर्चा यद्यपि छैन । परन्तु पूर्व वाक्य यसतिर संकेत गर्दछ । (फ़तहुल क़दीर)

وَالَّيْلِ اِذَا يَغْشٰهَا ۝٤
(४) सौगन्ध छ रात्रिको जब त्यसलाई ढाक्दछ ।[१]

وَالسَّمَاۗءِ وَمَا بَنٰهَا ۝٥
(५) सौगन्ध छ आकाशको तथा त्यसलाई बनाउनुको ।[२]

وَالْاَرْضِ وَمَا طَحٰهَا ۝٦
(६) सौगन्ध छ धर्तीको तथा त्यसलाई समतल पार्नुको ।[३]

وَنَفْسٍ وَّمَا سَوّٰىهَا ۝٧
(७) सौगन्ध छ धर्तीको तथा त्यसलाई सुधार गर्नुको ।[४]

فَاَلْهَمَهَا فُجُوْرَهَا وَتَقْوٰىهَا ۝٨
(८) अनि सुझ-बुद्धि दियो उसले पापको तथा त्यसबाट बच्नुको ।[५]

قَدْ اَفْلَحَ مَنْ زَكّٰىهَا ۝٩
(९) जसले त्यसलाई पवित्र गऱ्यो त्यो सफल भइहाल्यो ।[६]

---

[१]अर्थात् सूर्यलाई ढाकोस् तथा प्रत्येक दिशामा अँध्यारो छाओस् ।

[२]अथवा त्यस सत्ताको जसले त्यसलाई बनायो । प्रथम अर्थका आधारमा مَا धातुका अर्थका लागि छ तथा दोस्रो अर्थका आधारमा مَا को अर्थ مَنْ हो ।

[३]अथवा जसले त्यसलाई समतल बनायो ।

[४]अथवा जसले त्यसलाई सुधाऱ्यो । सुधार्नुको अभिप्राय हो त्यसका अङ्गहरूलाई सन्तुलित बनायो । बेढङ्गको बनाएन ।

[५]إلْـــهَام को अभिप्राय यो हो कि उनीहरूलाई राम्ररी सम्झाइदियो नबी एवं आकाशीय ग्रन्थहरूद्वारा पुण्य-पापबाट परिचित गराइदियो । अर्थात् अर्थ यो हो कि उनको प्रकृति तथा समझमा राम्रो नराम्रो तथा पुण्य एवं पापको बोध राखिदियो ताकि उनी पुण्यलाई अपनाऊन् तथा पापबाट बचून् ।

[६]शिर्कबाट पापबाट तथा नैतिक पतनबाट पवित्र गऱ्यो । त्यो पारलौकिक सौभाग्य तथा सफलताबाट अलंकृत हुनेछ ।

(१०) तथा जसले त्यसलाई माटोमा मिलाइदियो त्यो असफल भइहाल्यो ।[1]

وَقَدْ خَابَ مَن دَسَّىٰهَا ﴿١٠﴾

(११) समूदीहरूले आफ्ना उद्दण्डताका कारण झुठ्लाए ।[2]

كَذَّبَتْ ثَمُودُ بِطَغْوَىٰهَآ ﴿١١﴾

(१२) जब उनीहरूमध्येको ठूलो दूर्भाग्यशाली उभियो ।[3]

إِذِ ٱنۢبَعَثَ أَشْقَىٰهَا ﴿١٢﴾

(१३) उनीहरूलाई अल्लाहका सन्देष्टाले भनिदिएका थिए कि अल्लाह (तआला) को ऊटनी तथा त्यसले पिउने पालोको (सुरक्षा गर) ।[4]

فَقَالَ لَهُمْ رَسُولُ ٱللَّهِ نَاقَةَ ٱللَّهِ وَسُقْيَٰهَا ﴿١٣﴾

(१४) तिनीहरूले आफ्ना सन्देष्टालाई झूठा ठानेर त्यस ऊटनीलाई मारिहाले[5] त

فَكَذَّبُوهُ فَعَقَرُوهَا فَدَمْدَمَ

---

[1] अर्थात् जसले उसलाई विचलित गऱ्यो, त्यो हानिमा रह्यो । دَسَّ यो تَدْسِيسٌ बाट बनेको हो । जसको अर्थ हो, एउटा कुरोलाई अर्को कुरोले छुपाइदिनु । دَسَّاهَا को अर्थ हुन्छ जसले आफ्नो आत्मालाई लुकायो त्यसले त्यसलाई बेकार छाडिदियो तथा त्यसलाई अल्लाहको आज्ञाकारिता तथा पुण्यका कर्महरूका साथ प्रसिद्ध गरेन ।

[2] طُغْيَانٌ त्यो उद्दण्डता जसले सीमा उल्लंघन गर्दछ, यसै उद्दण्डताले उनलाई झुठ्लाउनमा उत्साहित गऱ्यो ।

[3] जसको नाम व्याख्याकारहरूले केदार बिन सालिफ़ बताएका छन् त्यसले यस्ता कुकर्म गऱ्यो कि हतभागाहरूको प्रमुख बन्न गयो । सबभन्दा ठूलो हत भागा ।

[4] अर्थात् त्यस ऊटनीलाई हानि पुऱ्याउँछ । यसैप्रकार जो त्यसले पानी पिउनुको दिन छ, त्यसमा गडबड नगरियोस् । ऊटनी तथा समूद जाति दुबैका लागि पानीको एउटा-एउटा दिन निर्धारित गरिएको थियो । त्यसको रक्षामाथि बल दिइएको थियो । किन्तु यी अत्याचारीहरूले चिन्ता गरेनन् ।

[5] यो कुकर्म एउटै व्यक्ति केदारले गरेको थियो । किन्तु यसका कुकर्ममा सम्पूर्ण जाति पनि त्यसका साथ थियो यसकारण यी सबैलाई बराबरको दोषी मानियो तथा झुठ्लाउनु एवं ऊटनी मार्नुलाई पूरा जातिसित सम्बन्धित गरियो जसबाट यो नियम विदित भयो कि एउटा कुकर्म यदि व्यक्ति गरोस् किन्तु पूरा समुदायले त्यस कुकर्मको इन्कार नगरोस् ।

عَلَيْهِمْ رَبُّهُمْ بِذَنْۢبِهِمْ فَسَوّٰىهَا ۝١٤

उनका प्रभुले उनका पापका कारण[1] उनीमाथि विनाश पारिदियो तथा पछि विनाशलाई जनसामान्यका लागि गरिदियो तथा त्यस बस्तीलाई बराबर पारिदियो ।[2]

وَلَا يَخَافُ عُقْبٰهَا ۝١٥

(१५) त्यो यस प्रकोपका परिणामबाट निर्भय छ ।[3]

## सूरतुल लैल-९२

سُوْرَةُ اللَّيْلِ

सूरतुल लैल मक्कामा अवतरित भएको तथा यसमा एक्काईस आयतहरु छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

وَالَّيْلِ اِذَا يَغْشٰى ۝١

(१) सौगन्ध छ रात्रिको जब छाइहाल्छ ।[4]

अपितु त्यसलाई प्रिय ठान्दछ भने सम्पूर्ण जाति यस कुकर्मको दोषी मानिनेछ तथा यस अपराध अथवा कुकर्ममा बराबरको भागी ठानिनेछ ।

[1] دَمْدَمَ عَلَيْهِمْ उनलाई विनष्ट गरिदियो तथा उनीमाथि घोर प्रकोप उतार्‍यो ।

[2] सार्वजनिक गरिदियो । अर्थात् यस यातनामा सबैलाई समान गरिदियो कसैलाई छाडेन । साना, ठूला सबैलाई नष्ट ध्वस्त गरिदियो अथवा धर्तीलाई उनीमाथि बराबर गरिदियो अर्थात् सबैलाई धर्तीभित्र गरिदियो ।

[3] अर्थात् अल्लाहलाई यो भय छैन कि उसले उनीहरूलाई दण्ड दिएको छ कुनै ठूलो शक्तिले त्यससँग बदला लिनेछ । त्यो परिणामबाट निर्भीक छ किनकि कुनै त्यस्तो शक्ति छैन जो त्यसभन्दा बढी अथवा त्यसका बराबर नै हो जो त्यससित प्रतिकार लिनुको सामर्थ्य राखेको होस् ।

[4] ***सूरतुल लैल:*** अर्थात् क्षितिजमा छाइहालोस्, जसबाट दिनको प्रकाश समाप्त तथा अन्धकार हुनजाओस् ।

وَالنَّهَارِ إِذَا تَجَلَّىٰ ﴿٢﴾
(२) तथा सौगन्ध छ दिनको जब प्रकाशित हुनजाओस् ।[1]

وَمَا خَلَقَ الذَّكَرَ وَالْأُنثَىٰ ﴿٣﴾
(३) तथा सौगन्ध छ त्यस (अस्तित्व) को जसले भाले-पोथीलाई पैदा गऱ्यो ।[2]

إِنَّ سَعْيَكُمْ لَشَتَّىٰ ﴿٤﴾
(४) नि:सन्देह तिम्रो प्रयत्न विभिन्न प्रकारको छ ।[3]

فَأَمَّا مَنْ أَعْطَىٰ وَاتَّقَىٰ ﴿٥﴾
(५) तसर्थ जुन व्यक्तिले दिँदैरह्यो तथा तर्सिरह्यो ।[4]

وَصَدَّقَ بِالْحُسْنَىٰ ﴿٦﴾
(६) तथा उत्तम कुराहरूको पुष्टि गरिरह्यो ।[5]

فَسَنُيَسِّرُهُ لِلْيُسْرَىٰ ﴿٧﴾
(७) त हामीले पनि त्यसका लागि सरलता उत्पन्न गरिदिनेछौं [6]

[1]अर्थात् रातको अन्धकार समाप्त तथा दिनको उज्यालो फैलन्छ ।

[2]यो अल्लाहले आफनो सौगन्ध खाएको छ किनकि नर नारी दुबैको रचयिता अल्लाह नै हुनुहुन्छ । यहाँ مَا-الَّذِى का अर्थमा छ ।

[3]अर्थात् कुनै राम्रो कर्म गर्दछ, जसको प्रतिफल स्वर्ग तथा कोही नराम्रो कर्म गर्दछ जसको प्रतिफल नरक छ । यो सौगन्धको उत्तर हो شَتَّى बहुवचन हो شَتِيتٌ को जस्तै مَرِيضٌ को مَرْضَى ।

[4]अर्थात् भलाईका कामहरूमा खर्च गर्नेछ तथा अवैधबाट बच्नेछ ।

[5]अथवा राम्रो प्रतिकारको पुष्टि गर्नेछ । अर्थात् यस कुराप्रति विश्वास राख्नेछ कि दान तथा संयमको अल्लाहको तर्फबाट उत्तम प्रतिफल हुनेछ ।

[6]يُسْرَى को अभिप्राय नेकी तथा الْخَصْلَةُ الْحُسْنَى हो अर्थात् हामी पुण्य तथा आज्ञा पालनको त्यसलाई योग्यता दिन्छौं तथा उनलाई त्यसका लागि सहज गरिदिन्छौं । व्याख्याकार भन्दछन् कि यो आयत आदरणीय अबूबक्र सिद्दीकका बारेमा उतरेको छ । जसले ६ दास मुक्त गरे जसलाई मुसलमान हुनुका कारण मक्कावासीहरुले कडा यातनाहरू दिन्थे । (फ़तहुल क़दीर)

وَأَمَّا مَنۢ بَخِلَ وَٱسۡتَغۡنَىٰ ۝٨

(८) परन्तु जसले कन्जुसी गऱ्यो तथा निश्चिन्तता व्यक्त गऱ्यो ।[१]

وَكَذَّبَ بِٱلۡحُسۡنَىٰ ۝٩

(९) तथा पुण्यकारी कुराहरूलाई झुठ्लायो ।[२]

فَسَنُيَسِّرُهُۥ لِلۡعُسۡرَىٰ ۝١٠

(१०) त हामीले पनि त्यसमाथि संकीर्णता तथा कठिनाईको साधन उपलब्ध गराइदिनेछौं ।[३]

وَمَا يُغۡنِي عَنۡهُ مَالُهُۥٓ إِذَا تَرَدَّىٰٓ ۝١١

(११) तथा त्यसको माल त्यसका (मुखका बल) खस्दाखेरि कोही काम आउनेछैन ।[४]

إِنَّ عَلَيۡنَا لَلۡهُدَىٰ ۝١٢

(१२) निःसन्देह मार्ग देखाइदिने हाम्रो दायित्व ।[५]

[१]अर्थात् अल्लाहको मार्गमा व्यय गर्नेछैन न अल्लाहको आज्ञाको वास्ता नै गर्नेछ ।

[२]अथवा परलोकका प्रतिफल तथा हिसाब-किताबको इन्कार गर्नेछ ।

[३] عُسۡرَىٰ (अभाव) सित अभिप्राय कुफ्र, अवज्ञा तथा दुराचार हो, अर्थात् हामीले त्यसका लागि अवज्ञाको मार्ग सरल गरिदिनेछौं । जसबाट त्यसका लागि भलाई तथा सौभाग्यका मार्ग कठिन हुन जानेछन् । पवित्र कुरआनमा यो विषय कैयन स्थानमा वर्णित भएको छ कि जो भलाई तथा सत्यको मार्ग अपनाउँछ अल्लाह त्यसका लागि भलाईको मार्ग सहज गरिदिन्छ तथा जो उपद्रव एवं पापलाई अपनाउँछ अल्लाहले त्यसलाई त्यसको दशामा छाडिदिन्छ । तथा यो त्यस भाग्यका अनुकूल नै हुनजान्छ जो अल्लाह आफ्ना ज्ञानमा लेखेर राखेको छ । (इब्ने कसीर) यो विषय हदीसमा पनि वर्णन गरिएको छ नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले भन्नुभयो तिमी कर्म गर प्रत्येक व्यक्ति जुन कर्मका लागि पैदा गरिएको छ, त्यो त्यसका लागि सहज गरिदिन्छ । जो भाग्यशाली छ त्यसलाई सौभाग्यका कर्मको सुविधा दिइन्छ । तथा जो हतभागा हुन्छ त्यसका लागि हतभागाहरूका कर्म सहज गरिदिइन्छन् । (सहीह अल-बुख़ारी सुरतुल लैल)

[४]अर्थात् जब नरकमा खस्नेछन् त यो धन जसलाई त्यसले खर्च गर्दथ्यो कुनै काम आउने छैन ।

[५]अर्थात् वैध-अवैध, राम्रो-नराम्रो मार्गदर्शन-पथभ्रष्टतालाई स्पष्ट तथा वर्णित गर्नु हाम्रो दायित्व हो (जो कि हामीले गरिदिएका छौं) ।

وَإِنَّ لَنَا لَلْآخِرَةَ وَالْأُولَىٰ ﴿١٣﴾

(१३) तथा हाम्रै हातमा परलोक एवं यो लोक छ ।[1]

فَأَنذَرْتُكُمْ نَارًا تَلَظَّىٰ ﴿١٤﴾

(१४) मैले त तिमीलाई प्रज्वलित दन्किने आगोबाट तर्साइदिएको छु ।

لَا يَصْلَاهَا إِلَّا الْأَشْقَى ﴿١٥﴾

(१५) जसमा केवल त्यो दूर्भाग्यशाली नै प्रवेश गर्नेछ ।

الَّذِي كَذَّبَ وَتَوَلَّىٰ ﴿١٦﴾

(१६) जसले झुठ्लायो तथा (त्यसका अनुकरणबाट) मुख फकाईहाल्यो ।[2]

وَسَيُجَنَّبُهَا الْأَتْقَى ﴿١٧﴾

(१७) तथा त्यसबाट यस्तो व्यक्ति टाढा राखिनेछ जो सदाचारी हुनेछ ।[3]



[1]अर्थात् दुबैका स्वामी हामी हौं। यिनमा जस्तो चाहन्छौं जे चाहन्छौं गरून् अर्थात् यी दुबैका अथवा यिनीमध्ये कुनै एकका अभिलाषी हामीसित नै माँगोस् किनकि प्रत्येक इच्छुकलाई आफ्नो इच्छा अनुसार हामी नै दिन्छौं ।

[2]यस आयतबाट मुर्जिआ सम्प्रदायले जो एउटा गलत सम्प्रदाय गुज्रेको छ यो तर्क निकालेको छ कि नरकमा केवल काफ़िर नै जानेछन् कुनै मुसलमान चाहे, जति पापी होस् नरक़मा जानेछैन किन्तु यो आस्था ती स्पष्ट सूत्रहरूका प्रतिकूल छ जसबाट प्रतिपादित हुन्छ कि धेरै मुसलमानहरू पनि जसलाई अल्लाहले दण्ड दिन चाहनेछ केही समयका लागि नरकमा जानेछन् अनि नबी (सल्लल्लाहु अलैहि व सल्लम) फरिश्ता तथा अन्य पवित्र आत्माहरूको सिफ़ारिशबाट निकालिनेछन् । यहाँ सीमित गर्नुको शैलीमा जो भनिएको छ त्यसबाट अभिप्राय यो हो कि जो पक्का काफ़िर तथा अत्यन्त अभागी छन् नरक वास्तवमा तिनैका लागि बनाइएको छ जसमा उनी अवश्य तथा नित्यका लागि प्रवेश गर्नेछन् । यदि केही अवज्ञाकारी मुसलमान नरक़मा जानेछन् भने उनी आवश्यक रुपले सधैंका लागि जाने छैनन् । बरु दण्ड स्वरुप उनको यो प्रवेश सामयिक हुनेछ । (फ़तहुल क़दीर)

[3]अर्थात् नरकबाट टाढा रहनेछ तथा स्वर्गमा प्रवेश गर्नेछ ।

(१८) जो शुद्धता प्राप्त गर्नको लागि आफ्नो माल दिन्छ ।[1]

ٱلَّذِى يُؤْتِى مَالَهُۥ يَتَزَكَّىٰ ﴿١٨﴾

(१९) कसैको त्यसमाथि उपकार छैन कि जसको प्रतिफल दिइराखिएको होस् ।[2]

وَمَا لِأَحَدٍ عِندَهُۥ مِن نِّعْمَةٍ تُجْزَىٰٓ ﴿١٩﴾

(२०) अपितु केवल आफ्ना महान् सर्वोच्च प्रभुको प्रसन्नता प्राप्त गर्नुहुन्छ ।[3]

إِلَّا ٱبْتِغَآءَ وَجْهِ رَبِّهِ ٱلْأَعْلَىٰ ﴿٢٠﴾

(२१) निःसन्देह त्यो (अल्लाह पनि) शीघ्र नै प्रसन्न हुनेछ ।[4]

وَلَسَوْفَ يَرْضَىٰ ﴿٢١﴾

[1]अर्थात् जो आफ्नो धन अल्लाहको आज्ञा अनुसार खर्च गर्नेछ ताकि त्यसको मन तथा धन पवित्र हुन जाओस् ।

[2]अर्थात् प्रतिफल उतार्नका लागि खर्च नगरेको होस् ।

[3]अपितु शुद्ध मनले अल्लाहको प्रसन्नता तथा स्वर्गमा त्यसका दर्शनका लागि खर्च गर्दछ ।

[4]अथवा त्यो प्रसन्न हुनेछ । अर्थात् जो यी विशेषताहरूले युक्त हुनेछ । अल्लाह (तआ़ला) ले त्यसलाई स्वर्गको अनुकम्पाहरू तथा आदर-भाव प्रदान गर्नेछ जसबाट त्यो प्रसन्न हुनजानेछ । अधिकांश व्याख्याकारहरूले भनेका छन् बरु केहीले सम्पूर्ण सहमतिसम्म उल्लेख गरेका छन् कि यी आयतहरू माननीय अबूबक्र सिद्दीकको शानमा उतरेका छन् तैपनि अर्थ तथा भावार्थका आधारमा साधारण छन् । जो पनि यी उच्च गुणहरूबाट युक्त हुनेछ, त्यो अल्लाहका सदनमा यसको चरितार्थ हुनेछ ।

سُورَةُ الضُّحَىٰ

## सूरतुज्जुहा-९३

सूरतुज्जुहा मक्कामा अवतरित भयो तथा यसमा एघार आयतहरु छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

وَالضُّحَىٰ ①

(१) सौगन्ध छ चाश्तं (सूर्यमाथि भई जानुका) समयको ।[1]

وَاللَّيْلِ إِذَا سَجَىٰ ②

(२) तथा सौगन्ध छ रात्रीको जब छाउँछ ।[2]

مَا وَدَّعَكَ رَبُّكَ وَمَا قَلَىٰ ③

(३) न त तिम्रा प्रभुले तिमीलाई छाडेको छ, न विमुख भएको छ ।[3]

وَلَلْآخِرَةُ خَيْرٌ لَّكَ مِنَ الْأُولَىٰ ④

(४) निःसन्देह तिम्रा लागि परलोक लोकभन्दा उत्तम छ ।

*सूरतुज्जुहा:* एकपटक नबी (सल्लल्लाहु अलैहि व सल्लम) रोगग्रस्त हुनुभयो । दुई तीन रात उहाँले तहज्जुदको नमाज पढ्नु भएन । एक स्त्री उहाँका निकट आई तथा भन्नथाली: हे मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) लाग्दछ तिम्रो शैतानले तिमीलाई छाडिदिएको छ । दुई-तीन रातिदेखि देखिराखेको छु कि तिम्रो निकट आएन । जसपश्चात अल्लाहले यो आयत अवतरित गऱ्यो । (सहीह अल-बुख़ारी, तफ़सीर वज्जुहा) यो स्त्री अबूलहबकी पत्नी उम्मे जमील थिई । (फ़तहुल बारी)

[1]चाश्त (जुहा) त्यस समयलाई भन्दछन् जब सूर्य उच्च हुन्छ । यहाँ अभिप्राय पूरा दिन छ ।

[2]سَجَىٰ को अर्थ سَكَنَ हो जब शान्त हुनजान्छ अर्थात् जब अन्धकार पूर्णतः छाउँछ किनकि त्यस समय प्रत्येक वस्तु शान्त हुनजान्छ ।

[3]जस्तो कि काफ़िर सम्झिराखेका छन् ।

[4]अथवा परलोक (आख़िरत) संसारभन्दा उत्तम छ दुबै भावार्थ अर्थ अनुसार उचित छ ।

وَلَسَوْفَ يُعْطِيكَ رَبُّكَ فَتَرْضَىٰ ۝٥

(५) तिमीलाई तिम्रो प्रभुले अतिशीघ्र (पुरस्कार) दिनेछ तथा तिमी प्रसन्न हुनेछौ ।[1]

أَلَمْ يَجِدْكَ يَتِيمًا فَآوَىٰ ۝٦

(६) के उसले तिमीलाई अनाथ पाएर स्थान दिएन ?[2]

وَوَجَدَكَ ضَالًّا فَهَدَىٰ ۝٧

(७) तथा तिमीलाई पथ गुमिएको पाएर मार्गदर्शन दिएन ?[3]

وَوَجَدَكَ عَائِلًا فَأَغْنَىٰ ۝٨

(८) तथा तिमीलाई निर्धन पाएर धनी बनाइदिएन ?[4]

فَأَمَّا الْيَتِيمَ فَلَا تَقْهَرْ ۝٩

(९) तसर्थ अनाथमाथि तिमीले पनि कठोरता नगर्ने गर ।[5]

وَأَمَّا السَّائِلَ فَلَا تَنْهَرْ ۝١٠

(१०) तथा माँग्नेवालालाई न हप्काउ ।[6]



[1]यसबाट सांसारिक विजय तथा परलोकको सफलता अभिप्राय छ । यसमा त्यो सिफारिशको अधिकार पनि सम्मिलित छ जो तपाईंलाई आफ्नो समूहका पापीहरूका लागि प्राप्ति हुनेछ ।

[2]अर्थात् पिताका सहाराबाट पनि बञ्चित थियो । हामीले तिम्रो सहायता गर्‍यौं तथा उपचार गर्‍यौं ।

[3]अर्थात् तिमीलाई धर्म तथा धर्मविधान एवं ईमानबारे थाहा थिएन । हामीले तिमीलाई मार्गदर्शन दियौं । नबूअत (दूतत्व) प्रदान गर्‍यौं तथा शास्त्र अवतरित गर्‍यौं । अन्यथा तिमी यसभन्दा पूर्व त मार्गदर्शनका लागि प्रयत्नशील थियौ ।

[4]धनीको अभिप्राय हो आफू अतिरिक्त सबैबाट निस्पृह गरिदियो । अनि तिमी भोखमा धैर्यवान तथा धनमा कृतज्ञ रह्यौ । जस्तो स्वयं नबी (सल्लल्लाहु अलैहि व सल्लम) को कथन छ कि "धनी हुनु संसाधनको अधिकताको नाम होइन । वास्तविक धन सम्पन्नता हृदयको सम्पन्नता हो ।" (सहीह मुस्लिम किताबुज़ ज़कात बाबुन लैसल गिना अन कसरतिल अर्ज़)

[5]अपितु त्यसका साथ कोमलता तथा उपकारको मामिला गर ।

[6]अर्थात् त्यससित कडाई तथा घमण्ड नगर । न खस्रो-तीतो कुरा गर बरु उत्तर पनि दिनु छ भने प्रेम तथा प्यारसित देऊ ।

وَأَمَّا بِنِعْمَةِ رَبِّكَ فَحَدِّثْ ﴿١١﴾

(११) तथा आफ्ना प्रभुका उपकारहरूको वर्णन गर्दैरह ।[1]

سُورَةُ الشَّرْحِ

## सूरत अलम नशरह-९४

सूरः अलम नशरह मक्कामा अवतरित भयो तथा यसमा आठ आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

أَلَمْ نَشْرَحْ لَكَ صَدْرَكَ ﴿١﴾

(१) के हामीले तिम्रा लागि तिम्रा छाती खोल्दिएनौं ?[2]

---

[1]अर्थात् अल्लाहले तिमीमाथि जुन उपकार गरेको छ । जस्तै मार्गदर्शन तथा रिसालत एवं नबूअतले सम्मान गऱ्यो । अनाथ हुनुका उपरान्त तिम्रा पालन पोषण तथा संरक्षणको व्यवस्था गऱ्यो तिमीलाई धैर्य तथा धन प्रदान गऱ्यो । तिनलाई कृतज्ञता तथा अनुगृहिताको भावनाका साथ वर्णन गर । यसबाट विदित भयो कि अल्लाहका अनुकम्पाहरूका चर्चा तथा तिनको प्रदर्शन अल्लाहलाई प्रिय छ । किन्तु घमण्ड तथा गर्वस्वरूप होइन अपितु अल्लाहको दयालुता एवं अनुग्रहको आभारी हुँदै त्यसको शक्ति तथा सामर्थ्यबाट तर्सदै कि त्यसले कही हामीलाई यी अनुकम्पाहरूबाट बञ्चित नगरिदेओस् ।

[2]विगत सूरतमा तीन पुरस्कारहरूको वर्णन थियो । यस सूरतमा अधिक तीन अनुग्रहको चर्चा छ । प्रथम छाती खोल्दिनु, यसबाट अभिप्राय छ वक्ष प्रकाशित तथा विस्तृत हुनजानु । ताकि सत्य पनि स्पष्ट हुन जाओस् तथा हृदयमा बसोस् । यस भावार्थमा कुरआन (सूरतुल अन्आम-१२५) को यो आयत हो ।

﴿فَمَن يُرِدِ اللَّهُ أَن يَهْدِيَهُ يَشْرَحْ صَدْرَهُ لِلْإِسْلَامِ﴾

"जसलाई अल्लाह मार्ग दर्शाउन चाहन्छ, त्यसको वक्ष (छाती) इस्लामका लागि खोल्दिन्छ ।" अर्थात् त्यसले इस्लामलाई सत्य धर्मका रुपमा चिन्दछ तथा त्यसलाई स्वीकार गरिहाल्छ । यस छाती फैलाउनुमा त्यो वक्ष चिर्नु पनि आउँछ जो विश्वसनीय रिवायतहरूबाट दुईपटक रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) को गरियो । एकपटक बाल्यवस्थामा जब उहाँको आयु चार वर्ष थियो जिब्रील (फरिश्ता) आउनुभयो तथा उहाँका हृदय चिरे तथा त्यसबाट त्यो शैतानी भाग निकाल्दिनुभयो जो प्रत्येक व्यक्तिको हृदयमा छ । अनि त्यसलाई धोएर

وَوَضَعْنَا عَنكَ وِزْرَكَ ﴿٢﴾

(२) तथा तिमी माथिबाट तिम्रो बोध उतारिदियौं ।[1]

الَّذِي أَنقَضَ ظَهْرَكَ ﴿٣﴾

(३) जसले तिम्रो पिठ्यूँ भाँचिदिएको थियो ।

وَرَفَعْنَا لَكَ ذِكْرَكَ ﴿٤﴾

(४) तथा हामीले तिम्रो चर्चा उच्च गरिदियौ ।[2]

فَإِنَّ مَعَ الْعُسْرِ يُسْرًا ﴿٥﴾

(५) त अवश्य कठिनाईका साथ सरलता छ ।

إِنَّ مَعَ الْعُسْرِ يُسْرًا ﴿٦﴾

(६) निःसन्देह कठिनाईका साथ सरलता छ ।[3]

बन्द गरिदिनु भयो । (सहीह मुस्लिम, किताबुल ईमान, बाबुल इस्रा) दोस्रो पटक मेराजका अवसरमा उहाँको हृदय निकालियो । त्यसलाई ज़मज़मका जलले धोएर आफ्नो स्थानमा राखियो । तथा त्यसलाई ईमान तथा तत्वदर्शीताले भरिदियो । (सहीहैन अबवाबुल मेराज तथा किताबुस्सलात)

[1]यो बोझ चालीस वर्षीय नबूअतभन्दा पूर्वको बोझ हो । यस युगमा उहाँलाई अल्लाहले पापहरूबाट सुरक्षित राख्यो । कुनै मूर्तिलाई उहाँले सजदा गर्नुभएन कहिल्यै मदिरापान गर्नुभएन तथा अन्य पापहरूबाट पनि अलग रहनुभयो । तैपनि अल्लाहको उपासना न उहाँ जान्नुहुन्थ्यो न कि, यसकारण यस चालीस वर्ष उपासना एवं आज्ञापालन नगर्नुको बोझ उहाँमाथि थियो जो वास्तवमा त थिएन किन्तु उहाँका संवेदन तथा प्रबोधले त्यसलाई बनाएर राखेको थियो । अल्लाहले त्यसलाई उतारिदिनुको घोषणा गरेर उहाँमाथि अनुग्रह गऱ्यो । यो मानौं त्यही अर्थ हो ﴿لِّيَغْفِرَ لَكَ اللَّهُ مَا تَقَدَّمَ مِن ذَنبِكَ وَمَا تَأَخَّرَ﴾ (अल-फ़तह) को छ । केही विदहरू भन्छन् कि यो नबूअत (दूतत्व) को बोझ थियो जसलाई अल्लाहले हल्का गरिदियो । अर्थात् त्यसका मार्गका कठिनाईहरू सहन गर्नुको साहस तथा धर्मका प्रचार एवं आमन्त्रणमा सुविधाहरू पैदा गरिदियो ।

[2]अर्थात् जहाँ अल्लाहको नाम आउँछ, जस्तै नमाज, अन्जान तथा अन्य धेरै स्थानहरूमा उहाँको नाम पनि आउँछ । आदि ग्रन्थहरूमा उहाँको चर्चा तथा गुणहरूको विवरण छ । फरिश्ताहरूमा उहाँको शुभ चर्चा छ । उहाँका आज्ञापालनले अल्लाहले आफ्नो आज्ञापालन भनेको छ तथा आफ्नो आज्ञाकारिताका साथ उहाँको आज्ञाकारिताको पनि आदेश दिएको छ । इत्यादि

[3]यो उहाँ तथा सहाबाका लागि शुभसूचना छ कि तिमी इस्लामको मार्गमा जुन कठिनाइहरू सहन गर्नेछौ । आत्तिनुको आवश्यकता छैन त्यसका पश्चात नै अल्लाहले तिमीलाई सुख सुविधा प्रदान गर्नेछ । तथा यस्तै नै भयो जसलाई समस्त संसार जान्दछ ।

فَإِذَا فَرَغْتَ فَانْصَبْ ⑦

(७) त जब तिमी खाली हुन्छौ त (इबादतमा) परिश्रम गर ।[१]

وَإِلَىٰ رَبِّكَ فَارْغَبْ ⑧

(८) तथा आफ्ना प्रभुतिर मन लगाउ ।[२]

## سُورَةُ التِّينِ

## सूरतुत्तीन-९५

सूरतुत्तीन मक्कामा अवतरित भएको तथा यसमा आठ आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त तथा अपार कृपालु छ ।

وَالتِّينِ وَالزَّيْتُونِ ①

(१) सौगन्ध छ इंजीरको तथा जैतूनको ।

وَطُورِ سِينِينَ ②

(२) तथा सनायीका तूर (पर्वत) को ।[३]

وَهَٰذَا الْبَلَدِ الْأَمِينِ ③

(३) तथा यस शान्ति भएको नगरको ।[४]

لَقَدْ خَلَقْنَا الْإِنْسَانَ فِي أَحْسَنِ تَقْوِيمٍ ④

(४) निःसन्देह हामीले मनुष्यलाई अति उत्तम रुपमा पैदा गर्‍यौं ।[५]

---

[१]अर्थात् नमाज़बाट वा धर्मप्रचारबाट तथा जिहादबाट, तिमी दुआमा परिश्रम गर कि तिमी थकित होऊ ।

[२]अर्थात् उसैबाट स्वर्गको आशा राख । उसैबाट आफ्ना आवश्यकताहरू माग तथा सबै विषयमा उसैमाथि विश्वास तथा भरोसा गर ।

[३]यो त्यही तूर पर्वत हो जहाँ अल्लाहले मूसा (अलैहिस्सलाम) सित कुरा गरेको थिया ।

[४]यसबाट अभिप्राय पवित्र नगर मक्का छ जसमा लडाई अवैध छ । यसका अतिरिक्त जो यसमा प्रवेश गर्दछ, त्यसलाई शान्ति प्राप्त हुन्छ । केही व्याख्याकारहरूको भनाई छ कि वास्तवमा तीन स्थानहरुको सौगन्ध छ । जसमध्ये प्रत्येकमा मर्यादा धर्मविधान वाहक ईशदूत पठाइए । इन्जिर तथा जैतूनसित अभिप्राय त्यो क्षेत्र हो जहाँ यसको उपज छ । तथा त्यो बैतुल मुकद्दस हो जहाँ माननीय ईसा पैगम्बर (ईशदूत) बनेर आए । सिना पर्वत अथवा सीनीनमाथि आदरणीय मूसालाई नबूवत (दूतत्व) प्रदान गरियो । तथा मक्कामा ईशदूतहरूका प्रमुख आदरणीय मुहम्मद रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) लाई पठाइयो । (इब्ने कसीर)

[५]यो शपथको उत्तम हो । अल्लाहले प्रत्येक सृष्टिलाई यस्तो रचेको छ कि तिनका मुख तल झुकेको छ केवल मनुष्यलाई लामो तथा सोझो आकार दिएको छ जो आफ्ना हातहरूबाट खान्छ तथा पिउँछ अनि उसका अङ्गहरूलाई सन्तुलित बनाएको छ । त्यसमा जनावरहरूका समान बेढगापना छैन, प्रत्येक महत्वपूर्ण अङ्ग दुई-दुईवटा बनायो तथा तिनमा अति उचित दूरी राख्यो ।

ثُمَّ رَدَدْنَٰهُ أَسْفَلَ سَٰفِلِينَ ﴿٥﴾

(५) अनि त्यसलाई नीचहरूभन्दा नीच गरिदियौं ।[1]

إِلَّا ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ فَلَهُمْ أَجْرٌ غَيْرُ مَمْنُونٍ ﴿٦﴾

(६) परन्तु जसले ईमान स्वीकार गरे तथा त्यस पश्चात पुण्यका काम गरे, त उनका लागि यस्तो पुरस्कार छ जो कहिल्यै समाप्त हुनेछैन ।[2]

فَمَا يُكَذِّبُكَ بَعْدُ بِٱلدِّينِ ﴿٧﴾

(७) त तिमीलाई अब प्रतिफलका दिनलाई झुठ्लाउन कुन कुरो उत्साहित गर्दछ ।[3]

أَلَيْسَ ٱللَّهُ بِأَحْكَمِ ٱلْحَٰكِمِينَ ﴿٨﴾

(८) के अल्लाह (तआ़ला) समस्त हाकिमहरूको हाकिम होइन ?[4]

---

अनि त्यसमा बोध, विचार, समझ तथा कान राखिदियो जो वास्तवमा अल्लाहका गुण हुन् । मानौं यी गुणहरूका आधारमा मानिस अल्लाहका गुणहरू द्योतक कथा त्यसको प्रतिविम्ब हो । केही विद्वानहरूले यस हदीसलाई पनि यसै अर्थ तथा भावार्थमा लिएका छन् ।

«إِنَّ اللهَ خَلَقَ آدَمَ عَلَىٰ صُورَتِهِ»

(मुस्लिम किताबुल बिर्रे वससिला वल आदाब) "अल्लाहले आदमलाई आफ्ना रुपमा पैदा गऱ्यो ।" मानिसको रचनामा यी सब कुराहरूको व्यवस्था नै أَحْسَنِ تَقْوِيمٍ (उत्तम रचना) छ जसको वर्णन अल्लाहले तीन सौगन्धहरूका पश्चात गरेको छ । (फ़तहुल क़दीर)

[1]यो संकेत मनुष्यको अर्जल आयु (निकै अधिक आयुतिर), जसमा जवानी तथा यौवनका पश्चात वुढेस तथा क्षीणता आउँछ तथा मानिसको बुद्धि बालकका समान हुनजान्छ । केही विदहरूले यसबाट कर्मको त्यो पतन लिए जसमा लीन भएर मानिस अति पतित तथा सर्प, बिच्छीभन्दा पनि अधिक नीच बन्नजान्छ तथा यसबाट केहीले त्यो अपमानित तथा हीनताको यातना लिएका छन् जो नरकमा काफ़िरहरूका लागि मानौं मनुष्य अल्लाह तथा रसूलको आज्ञाकारिताबाट हटेर आफूलाई उत्तम रचनाका समानबाट गिराएर नरकको सबभन्दा तल्लो श्रेणीमा हाल्दछ ।

[2]पूर्वको आयतका प्रथम भावार्थका आधारमा यो वाक्य वर्णनका लागि छ जो मोमिनहरूको स्थितिको वर्णन गरिराखेको छ । तथा दोस्रो, देस्रो भावार्थका आधारमा पूर्वमाथि बल दिनका लागि छ कि यस परिणामबाट उसले मोमीनहरूलाई अलग गरिदियो । (फ़तहुल क़दीर)

[3]यो मानिससित सम्बोधन छ हकारका लागि कि अल्लाहले तिमीलाई उत्तम रुपमा बनायो तथा यसका विपरीत त्यो अपमानका खाडलमा पनि गिराउन सक्छ । उसको अभिप्राय हो कि पुनर्जीवन प्रदान गर्न कठिन होइन यसका पश्चात पनि तिमी प्रलय तथा प्रतिकारको इन्कार गर्दछौ ।

[4]जो कसैमाथि अत्याचार गर्दैन त्यसका न्यायकै माँग हो कि प्रलयको स्थापना गरोस् तथा त्यसबाट न्याय गरोस् जसमाथि अत्याचार भएको छ । पहिला गुज्रिसकेछ कि एउटा जीर्ण हदीसमा यसको उत्तर «بَلَىٰ وَأَنَا عَلَىٰ ذَٰلِكَ مِنَ الشَّاهِدِينَ» आएको छ (तिर्मिजी)

## सूरतुल अलक़ ९६

سُوْرَةُ الْعَلَقِ

सूरतुल अलक मक्कामा अवतरित भयो तथा यसमा उन्नाइस आयत छन्।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहको नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ।

اِقْرَاْ بِاسْمِ رَبِّكَ الَّذِيْ خَلَقَ ۝١

(१) आफ्ना प्रभुको नाम लिएर पढ जसले पैदा गऱ्यो।[1]

خَلَقَ الْاِنْسَانَ مِنْ عَلَقٍ ۝٢

(२) जसले मनुष्यलाई रगतका डल्लोबाट पैदा गर्‍यो।[2]

اِقْرَاْ وَرَبُّكَ الْاَكْرَمُ ۝٣

(३) तिमी पढिराख तिम्रो प्रभु बडो उदार छ।[3]

الَّذِيْ عَلَّمَ بِالْقَلَمِ ۝٤

(४) जसले कलमद्वारा (ज्ञान) सिकायो।[4]

---

[1] ***सूरतुल अलक:*** यो सर्वप्रथम प्रकाशना हो जो नबी (सल्लल्लाहु अलैहि व सल्लम) माथि त्यस समय आयो जब उहाँ हिरा पर्वतको गुफामा उपासनामा लीन हुनुहुन्थ्यो। फरिश्ताले आएर भन्यो पढ उहाँले भन्नुभयो म त पढेको छैन। फरिश्ताले उहाँलाई जोडले अँगालोमा तान्यो तथा भन्यो पढ उहाँले पुन: त्यही उत्तर दिनुभयो यसप्रकार तीन पटक उहाँले अँगालोमा कस्यो (विवरणका लागि हेर्नुहोस् सहीह अल बुख़ारी बाब बदऊल वह्यी र मुस्लिम अल ईमान बाबु बदइल वह्यी) जो तिमीतिर प्रकाशना गरिन्छ, त्यो पढ خَلَقَ जसले समस्त सृष्टिलाई रच्यो।

[2] सृष्टिमा विशेषत: मनुष्यको उत्पत्तिको चर्चा गऱ्यो जसबाट उसको श्रेष्ठता स्पष्ट छ।

[3] यो बल दिनुको स्वरुप हो तथा यसमा बडो प्रभावित ढङ्गले त्यस विवशताको निवारण भनिदियो जो उहाँले प्रस्तुत त गर्नुभयो कि म त पढेकै छैन, अल्लाहले भन्नुभयो अल्लाह बडो दयालु छ पढ। अर्थात् मनुष्यका त्रुटिहरूलाई क्षमा गर्नु त्यसको विशेष गुण हो।

[4] قَلَمٌ को अर्थ हो काट्नु, तास्नु। क़लम (लेखनी) पनि प्राचीन युगमा तासेर नै बनाइन्थ्यो। यसकारण लेख्ने यन्त्रलाई कलमबाट व्यञ्जित गऱ्यो। केही ज्ञान त मनुष्यको बुद्धिमा हुन्छ। केही मुखले व्यक्त गर्दछ। यही कलमले कागजमा लेख्दछ। जो बुद्धि तथा स्मरण शक्तिमा हुन्छ त्यो मनुष्यका साथमा नै गइहाल्छ। हो कलमले

عَلَّمَ الْإِنسَانَ مَا لَمْ يَعْلَمْ ⑤

(५) जसले मनुष्यलाई त्यो सिकायो जसलाई त्यो जान्दैनथ्यो ।

كَلَّا إِنَّ الْإِنسَانَ لَيَطْغَىٰ ⑥

(६) वास्तवमा मनुष्य त अट्टेरीपना गर्दछ ।

أَن رَّآهُ اسْتَغْنَىٰ ⑦

(७) यसकारण कि त्यो आफूलाई निश्चित (अथवा धनवान) ठान्दछ ।

إِنَّ إِلَىٰ رَبِّكَ الرُّجْعَىٰ ⑧

(८) निःसन्देह फर्कनुपर्ने तिम्रो प्रभुतिर छ ।

أَرَأَيْتَ الَّذِي يَنْهَىٰ ⑨

(९) के त्यसलाई पनि तिमीले देख्यौ, जो (एक भक्तलाई) रोक्दछ ।

عَبْدًا إِذَا صَلَّىٰ ⑩

(१०) जबकि त्यो भक्त नमाज पढ्दछ ।[1]

أَرَأَيْتَ إِن كَانَ عَلَى الْهُدَىٰ ⑪

(११) बताउ त यदि त्यो सोभ्ो मार्गमा छ ।[2]

---

लेख्यो यदि कुनै कारणले बर्बाद हुँदैन भने सधैं सुरक्षित रहन्छ । यसै कलमद्वारा विगत मानिसहरूका इतिहास तथा पूर्वजहरूका ज्ञानको कोष सुरक्षित छ । यहाँसम्मकि आकाशीय धर्मशास्त्रहरूको सुरक्षाको साधन पनि यही हो । यसबाट कलमको महत्व स्पष्ट गर्नुको आवश्यकता रहँदैन । यसकारण अल्लाहले सबभन्दा पहिला कलमलाई पैदा गऱ्यो तथा त्यसलाई सम्पूर्ण सृष्टिको भाग्य लेख्ने आदेश दियो ।

[1]व्याख्याकार भन्दछन् कि राक्नेवालासित अभिप्राय अबूजहल हो जो इस्लामको कडा विरोधी थियो عَبْدًا (एउटा भक्त) सित अभिप्राय नबी (सल्लल्लाहु अलैहि व सल्लम) हुनुहुन्छ ।

[2]अर्थात् त्यसले जसलाई नमाज पढ्नुबाट रोकिराखेको छ, त्यो संमार्गमा छ ।

(१२) अथवा परहेज़गारीको अनुदेश दिइराखेको हुन्छ ।[1] | أَوۡ أَمَرَ بِٱلتَّقۡوَىٰٓ ١٢

(१३) हेर त, यदि त्यो झुठ्लाइरहेको छ तथा मुख फर्काइराखेको हुन्छ भने ।[2] | أَرَءَيۡتَ إِن كَذَّبَ وَتَوَلَّىٰٓ ١٣

(१४) के यो जान्दैन कि अल्लाह (तआ़ला) त्यसलाई राम्ररी देखिराखेको छ ।[3] | أَلَمۡ يَعۡلَم بِأَنَّ ٱللَّهَ يَرَىٰ ١٤

(१५) निःसन्देह यदि यो रोकिएन भने हामीले त्यसका निधार तल पारी समातेर घिसार्नेछौं ।[4] | كَلَّا لَئِن لَّمۡ يَنتَهِ لَنَسۡفَعَۢا بِٱلنَّاصِيَةِ ١٥

(१६) यस्तो निधार जो झूठा तथा पापी छ ।[5] | نَاصِيَةٖ كَٰذِبَةٍ خَاطِئَةٖ ١٦

(१७) त्यसले आफ्ना सभावालाहरूलाई बोलाओस् । | فَلۡيَدۡعُ نَادِيَهُۥ ١٧

[1]अर्थात् शुद्धता, तौहीद (एकेश्वरवाद) तथा पुण्यका कर्महरूका शिक्षा जो नरकको अग्निबाट मनुष्य बच्न सक्छ । त के यी कुराहरू नमाज़ पढ्न तथा संयमको शिक्षा दिन) यस्ता कुराहरू हुन् कि उसको विरोध गरियोस् तथा त्यसमाथि त्यसलाई धम्कीहरू दिइयोस् ?

[2]अर्थात् यो अबु ज़हल अल्लाहका पैग़म्बरलाई झुठ्लाइरहेको हुन्छ था ईमानबाट मुख फर्काइराखेको हुन्छ । أَرَأَيْتَ यो أَخْبِرْنِي का अर्थमा छ (मलाई बताऊ) ।

[3]अभिप्राय यो हो कि जो उपरोक्त गतिविधिहरू गरिराखेको छ, के जान्दैन कि अल्लाह (तआ़ला) सबै कुरा देखिराखेको छ । त्यसले यसको उसलाई प्रतिफल दिनेछ । अर्थात् أَلَمْ يَعْلَمْ उपरोक्त शर्तहरू ﴿إِن كَانَ عَلَى ٱلْهُدَىٰٓ * أَوْ أَمَرَ بِٱلتَّقْوَىٰٓ﴾ ، ﴿إِن كَذَّبَ وَتَوَلَّىٰٓ﴾ को जज़ा (पुरस्कार) हो ।

[4]अर्थात् नबी (सल्लल्लाहु अलैहि व सल्लम) का विरोध तथा शत्रुताबाट एवं उहाँलाई नमाज पढ्नुबाट रोक्दछ । यसबाट रोकिएन । نَسْفَعًا को अर्थ हो لَنَأْخُذَنْ हामीले त्यसको ललाट (निधार) समातेर घिसार्नेछौं । हदीसमा आउँछ कि अबू जहलले भनेको थियो, यदि मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) काबाका पास नमाज़ पढ्नबाट रोकिएन भने त्यसको गर्दनमा खुट्टा राखिदिनेछु । (अर्थात् त्यसलाई कुल्चिदिनेछु । तथा यसप्रकार अपमानित गर्नेछु) नबी (सल्लल्लाहु अलैहि व सल्लम) लाई यो सूचना प्राप्त भयो त उहाँले भन्नुभयो यदि त्यो यस्तो गर्दथ्यो भने फरिश्ताहरूले त्यसलाई समातिहाल्थ्यो । (सहीह अल बुख़ारी तफ़सीर सूरतिल अलक़)

[5]ललाट (निधार) यो गुणको अर्थ हो कि त्यो झूठा छ आफ्नो कुरामा, पापी छ आफ्ना कर्ममा ।

(१८) हामीले पनि नरकका रक्षकहरूलाई बोलाइहाल्नेछौं ।[1]

سَنَدْعُ الزَّبَانِيَةَ ﴿١٨﴾

(१९) सावधान ! त्यसको भनाई कदापि नमान्नु तथा सज्दा गर एवं समीप भइहाल ।

كَلَّا لَا تُطِعْهُ وَاسْجُدْ وَاقْتَرِب ﴿١٩﴾

## सूरतुल क़द्र-९७

سُورَةُ القَدْرِ

सूरतुल क़द्र मक्कामा अवतरित भयो तथा

[1]हदीसमा वर्णित छ कि नबी (सल्लल्लाहु अलैहि व सल्लम) अल्लाहका घर काअबाका समीप नमाज पढिराख्नु भएको थियो । अबू जहल गुज्रयो त भन्यो हे मुहम्मद ! मैले तिमीलाई नमाज पढ्नुबाट रोकेको थिइन ? तथा उहाँसित धम्कीले भरिएको कुरा गऱ्यो, उहाँले पनि कडा उत्तर दिनुभयो । त भन्नथाल्यो हे मुहम्मद ! तिमीले कुन कुरोबाट तर्साउँछौ ? अल्लाहको सौगन्ध, यस वादीमा सबभन्दा अधिक मेरो समर्थक छन् जस पश्चात यो आयत अवतरित भयो । माननीय इब्ने अब्बास भन्नुहुन्छ । यदि त्यसले आफ्ना समर्थकहरूलाई बोलाएको भए त तत्क्षण यातनाका फरिश्ता उनीहरूलाई समातिहाल्थे । (तिर्मिजी तफ़सीर सूरते इकरा, मुसनद अहमद १/३२९, तफ़सीर इब्ने ज़रीर) तथा सहीह मुस्लिमको शब्द छन् कि त्यसले अगाडि बढेर उहाँको गर्दनमाथि खुट्टा राख्नुको इरादा गरे कि तत्क्षण पछाडि हट्यो, तथा आफ्ना हातहरूबाट आफ्नो बचाव गर्नथाल्यो, उससित भनियो कि के कुरो छ ? उसले भन्यो, मेरो तथा मुहम्मदका बीच आगोको (खाल्डो) भयावह दृश्य तथा धेरै पखेटाहरू छन् । रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमले भन्नुभयो । यदि त्यो मेरो समीप भएको भए फरिश्ताहरू त्यसको चोकटा-चोकटा लुछिहाल्थे, (किताबु सिफातिल कयामः, बाबु इन्नल इन्साना लैतगा) الزَّبَانِيَة अधिकारी पुलिस, अर्थात् शक्तिशाली सेना । जसको कोही मुकाबिला गर्न सक्दैन ।

***सूरतुल क़द्र :*** यस सूरतका मक्की तथा मदनी हुने कुरोमा मतभेद छ यसको नाम राख्नुका कारणमा विभेद छ । क़द्रको अर्थ आदर-मान पनि हो । यसैकारण कद्रको रात भन्छन् । यसको अर्थ अनुमान लगाउनु तथा निर्णय गर्नु पनि हो । यसमा पुरै वर्षको निर्णय गरिन्छ । त्यसैकारण यसलाई لَيْلَةُ الْحُكْم पनि भन्दछन्। यसको अर्थ संकीर्णता पनि हो । यस राती यति अधिकताले फरिश्ताहरू उत्रन्छन् कि धर्ती साँगुरो हुनजान्छ । क़द्रको अर्थात् संकीर्ण रात । अथवा यसकारण यो नाम राखियो कि यस राति जो उपासना गरिन्छ अल्लाहकहाँ त्यसको बडो आदर छ । तथा यसमा निकै पुण्य छन् । यसका निर्धारणमा पनि निकै मतभेद छ । (फ़तुहुल क़दीर) तैपनि हदीस तथा सहाबाका कथनहरूबाट यो सिद्ध छ कि त्यो रमजान महिनाको अन्तिम दस विषम रातहरूमध्ये कुनै एउटा रात हुन्छ । त्यसलाई स्पष्ट नगर्नुमा यही मतभेद छ कि मानिस पाँचवटा रातहरूमा यसको शुभ प्राप्त गर्नका लोभमा अल्लाहको अत्याधिक इबादत गरून् ।

यसमा पाँच आयत छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

إِنَّآ أَنزَلْنَٰهُ فِى لَيْلَةِ ٱلْقَدْرِ ①

(१) नि:सन्देह हामीले यसलाई क़द्र (शुभ) को रात्रिमा अवतरित गऱ्यौ ।[1]

وَمَآ أَدْرَىٰكَ مَا لَيْلَةُ ٱلْقَدْرِ ②

(२) तिमीले के बुझ्यौ कि क़द्र (शुभ) को रात्रि के हो ?[2]

لَيْلَةُ ٱلْقَدْرِ خَيْرٌ مِّنْ أَلْفِ شَهْرٍ ③

(३) क़द्रको राति एक हजार महिनाभन्दा श्रेष्ठ छ ।[3]

تَنَزَّلُ ٱلْمَلَٰٓئِكَةُ وَٱلرُّوحُ

(४) यसमा (प्रत्येक कार्यलाई पूर्ण गर्नका लागि) आफ्ना प्रभुका आदेशले फरिश्ता एंव

[1]अर्थात् उतार्नु आरम्भ गऱ्यो अथवा लौहे महफूजबाट बैतुल इज़्ज़तमा जो पहिला आकाशमा छ उताऱ्यौ । तथा त्यहाँबाट आवश्यकता अनुसार नबी (सल्लल्लाहु अलैहि व सल्लम) माथि अवतरित गरिरह्यौ । यहाँसम्मकि लगभग २३ वर्षमा पूरा भयो, तथा लैलतुलक़द्र रमज़ानमै हुन्छ । जस्तो कि क़ुरआनको आयत ﴿شَهْرُ رَمَضَانَ الَّذِىٓ أُنزِلَ فِيهِ الْقُرْءَانُ﴾ बाट स्पष्ट छ ।

[2]यस प्रश्नवाट यस रात्रिको श्रेष्ठता तथा महत्व स्पष्ट गर्नुछ । मानौं मानिस त्यसका गूढता (कठिनाई) सम्म पूर्णरुपले पुग्न सक्दैनन् । यो केवल अल्लाह नै हो जो त्यसलाई जान्दछ ।

[3]अर्थात् यस एक रातिको उपासना हजार महीनाभन्दा उत्तम छ । तथा हजार महिना ८३ वर्ष चार महिनाको हुन्छ । यो मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) का अनुयायीहरूमाथि अल्लाहको कति महान अनुग्रह छ कि लघु आयुमा अधिकभन्दा अधिक पुण्य प्राप्त गर्नका लागि कस्तो सरलता प्रदान गरिदिएको छ ।

فِيهَا بِإِذْنِ رَبِّهِم مِّن كُلِّ أَمْرٍ ۝

रुह (जिब्रील) अवतरित हुन्छन् ।[1]

سَلَٰمٌ هِيَ حَتَّىٰ مَطْلَعِ الْفَجْرِ ۝

(५) यो रात्रि साक्षात शान्तिको हुन्छ[2], तथा फज्रका उदय हुनेसम्म हुन्छ ।

## سُورَةُ الْبَيِّنَةِ

## सूरतुल बय्येनः-९८

सूरतुल वय्येनः मदीनामा अवतरित भयो तथा यसमा आठ आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं कृपालु छ ।

لَمْ يَكُنِ الَّذِينَ كَفَرُوا مِنْ أَهْلِ الْكِتَابِ

(१) अहले किताबका काफ़िर[3] तथा



[1]रुहसित अभिप्राय आदरणीय जिब्रील हुन् । अर्थात् फरिश्ता आदरणीय जिब्रील सहित यस रात्रि धर्तीमा ओर्लन्छन् तथा ती कामहरूलाई पूरा गर्दछन् जसको निर्णय त्यस वर्षमा अल्लाह (तआ़ला) भन्दछ ।

[2]अर्थात् यसमा पाप होइन अथवा यस अर्थमा शान्तिको रात्रि हो कि मोमिन् यस रात शैतानका उपद्रवबाट सुरक्षित रहन्छन् । अथवा फरिश्ताहरू ईमान भएकाहरूलाई सलाम गर्दछन् । अथवा फरिश्ताहरू परस्पर सलाम गर्दछन् । क़दको रातिका लागि रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) ले विशेषरुपले यो दुआ भन्नुभएको छ اللَّهُمَّ إِنَّكَ عَفُوٌّ تُحِبُّ العفو فاعْفُ عَنِّي (तिर्मिजी, अबवाबुद दावात, इब्ने माजा किताबुददुआ)

***सूरतुल बय्येनः*** यसको दोस्रो नाम सूरत لَم يَكُن हो । हदीसमा छ, नबी (सल्लल्लाहु अलैहि वसल्लम) ले आदरणीय उबै बिन काब सित भन्नुभयो अल्लाहले मलाई आज्ञा दिएको छ कि, म सूरत ﴿لَمْ يَكُنِ الَّذِينَ كَفَرُوا﴾ तिमीलाई पढेर सुनाऊँ । उबैले सोधे के अल्लाहले तपाईंका सामु मेरो नाम लिएको छ । उहाँले भन्नुभयो हो । जसपश्चात (अपार हर्षले) उबैइयको आँखामा अश्रु आइहाले । (सहीह बुख़ारी, तफ़सीर सूरत लम यकुन)

[3]त्यसबाट अभिप्राय यहूद तथा इसाई हुन् ।

وَالْمُشْرِكِينَ مُنفَكِّينَ حَتَّىٰ تَأْتِيَهُمُ الْبَيِّنَةُ ①

मूर्तिपूजकहरू[1], जबसम्मकि उनका पास स्पष्ट निशानी आउँदैन रुक्नेवाला थिएनन् (त्यो निशानी यो थियो, कि)

رَسُولٌ مِّنَ اللَّهِ يَتْلُو صُحُفًا مُّطَهَّرَةً ②

(२) अल्लाह (तआ़लाको एउटा[2] सन्देष्टा, जो पवित्र पुस्तक पढ्दछ ।[3]

فِيهَا كُتُبٌ قَيِّمَةٌ ③

(३) जसमाथि ठीक एवं उचित आदेश होऊन ।[4]

وَمَا تَفَرَّقَ الَّذِينَ أُوتُوا الْكِتَابَ إِلَّا مِن بَعْدِ مَا جَاءَتْهُمُ الْبَيِّنَةُ ④

(४) अहले किताब आफ्ना पासमा स्पष्ट निशानी आइहाल्नुका पश्चात नै (मतभेदमा परेर) विभाजित भइहाले ।[5]

---

[1]मुशिरकसित अभिप्राय अरब तथा अन्य देशहरूका ती मानिस हुन् जो मूर्तिहरू तथा अग्निका पूजारी थिए । مُنفَكِّينَ रोकिनेहरू بَيِّنَةٌ (प्रमाण) सित अभिप्राय आदरणीय नबी (सल्लल्लाहु अलैहि व सल्लम) हुन् । अर्थात् यहूद, ईसाई तथा अरब एवं अन्य देशहरूका बहुईश्वरवादीहरुले मान्ने छैनन् यहाँसम्मकि उनका पासमा मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) कुर्आन ल्याउन तथा उनको मूर्खता एवं कुमार्गलाई बताउन तथा उनलाई ईमानको आमन्त्रण देऊन् ।

[2]अर्थात् माननीय मुहम्मद (सल्लल्लाहु अलैहि व सल्लम) ।

[3]अर्थात् कुर्आन मजीद जो लौहे महफ़ूज़मा पाक (पवित्र) पृष्ठहरूमा अंकित छ ।

[4]यहाँ كُتُبٌ पुस्तकहरूबाट अभिप्राय धर्मविधान तथा قَيِّمَةٌ सन्तुलित एवं सीधा ।

[5]अर्थात् ग्रन्थधारी यहूदी एवं ईसाई माननीय नबी (सल्लल्लाहु अलैहि व सल्लम) को आगमनभन्दा पहिला एकमत थिए । यहाँसम्मकि उहाँ (सल्लल्लाहु अलैहि वसल्लम) नबी बनेर आइहाल्नुभयो । तत्पश्चात यिनी विभक्त हुन गए । तिनीहरूमध्ये केही मोमिन् भए किन्तु अधिकांश ईमानबाट वञ्चित नै रहे । नबी (सल्लल्लाहु अलैहि व सल्लम) को (नबूअत) तथा पैग़म्बरीलाई प्रमाण भन्नुभयो बिन्दु कि उहाँको सत्यता स्पष्ट थियो जसबाट इन्कार असम्भव थियो । किन्तु यिनीहरूले उहाँलाई केवल ईर्ष्या तथा शत्रुताका कारण झुठ्लाए । यही कारण हो कि यहाँ विभेद गर्नेहरूमा मात्र अहले किताबको नाम लिइएको छ जबकि अरुहरूले पनि यो काम गरेका थिए । किनकि यिनीहरू जान्दथे तथा उहाँ (सल्लल्लाहु अलैहि व सल्लम) का आगमनका चर्चा उनका किताबहरूमा विद्यमान थिए ।

وَمَآ أُمِرُوٓا۟ إِلَّا لِيَعْبُدُوا۟ ٱللَّهَ مُخْلِصِينَ لَهُ ٱلدِّينَ حُنَفَآءَ وَيُقِيمُوا۟ ٱلصَّلَوٰةَ وَيُؤْتُوا۟ ٱلزَّكَوٰةَ ۚ وَذَٰلِكَ دِينُ ٱلْقَيِّمَةِ ﴿٥﴾

(५) उनीहरूलाई यसका अतिरिक्त कुनै आदेश दिइएन[1] कि केवल अल्लाहको इबादत गरुन् उसैका लागि धर्मलाई शुद्ध गरेर राखून् । इब्राहीम एकेश्वरवादी[2] का धर्ममा तथा नमाज़लाई स्थापित राखून् तथा ज़कात दिंदैरहून् । यही धर्म सत्य तथा शाश्वतको हो ।[3]

إِنَّ ٱلَّذِينَ كَفَرُوا۟ مِنْ أَهْلِ ٱلْكِتَـٰبِ وَٱلْمُشْرِكِينَ فِى نَارِ جَهَنَّمَ خَـٰلِدِينَ فِيهَآ ۚ أُو۟لَـٰٓئِكَ هُمْ شَرُّ ٱلْبَرِيَّةِ ﴿٦﴾

(६) नि:सन्देह जुन मानिसहरू अहले किताबहरू मध्ये काफ़िर भए तथा मूर्तिपूजक, उनी नरकको अग्निमा (जानेछन्) जहाँ उनी सधैं रहनेछन्, यी मानिसहरू निम्न श्रेणीका सृष्टि हुन् ।[4]

إِنَّ ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّـٰلِحَـٰتِ أُو۟لَـٰٓئِكَ هُمْ خَيْرُ ٱلْبَرِيَّةِ ﴿٧﴾

(७) नि:सन्देह जसले ईमान स्वीकार गरे तथा पुण्यका कार्य गरे, यी मानिसहरू सर्वोच्च श्रेणीका सृष्टि हुन् ।[5]

---

[1]अर्थात् उनका किताबहरूमा यो आदेश त उनीहरूलाई दिइएको थियो ।

[2] حَنِيفٌ को अर्थ हो झुक्नु, एकाग्र हुनु, حُنَفَاء बहुवचन हो अर्थात् बहुईश्वरवादबाट एकेश्वरवादतिर तथा सबै मतहरूबाट हटेर इस्लाम धर्मतिर झुक्दै तथा एकाग्र हुँदै । जस्तै माननीय इब्राहीमले गरे ।

[3] القَيِّمَة विशेष्य लुप्तको विशेषण हो | دِيْنُ المِلَّةِ القَيِّمَةِ यही यस मिल्लत एवं उम्मत (समुदाय) को धर्म हो जो सोझो सन्तुलित छ । अधिकांश विद्वानहरूले यस आयतबाट यो भाव निकालेका छन् कि कर्म ईमानमा प्रविष्ट छ । (इब्ने कसीर)

[4]यो अल्लाहका रसूल तथा त्यसका शास्त्रहरूको इन्कार गर्नेहरूको परिणाम हो तथा उनलाई पुरै सृष्टिबाट अवान्छिनीय भनिएको छ ।

[5]जो हृदयदेखि ईमान स्वीकार गरे तथा अङ्गहरूबाट कर्म गरे उनी पूरा सृष्टिबाट उत्तम तथा प्रधान छन् । जुन विद्वान् यो मान्दछन् कि मोमिन भक्तहरू फरिश्ताभन्दा उत्तम तथा प्रतिष्ठित छन् उनको तर्क यो आयत पनि हो । البَرِيَّة यो بَرَأَ (خَلَق) बाट छ जसको अर्थ पैदा गर्नु हो । यसबाट

جَزَآؤُهُمۡ عِندَ رَبِّهِمۡ جَنَّٰتُ عَدۡنٖ تَجۡرِي مِن تَحۡتِهَا ٱلۡأَنۡهَٰرُ خَٰلِدِينَ فِيهَآ أَبَدٗاۖ رَّضِيَ ٱللَّهُ عَنۡهُمۡ وَرَضُواْ عَنۡهُۚ ذَٰلِكَ لِمَنۡ خَشِيَ رَبَّهُۥ ۝٨

(८) उनको पुरस्कार उनका प्रभुका पास स्थाई रहने स्वर्ग छन् जसका मुनि (शीतल जलका) सरिताहरू प्रवाहित छन् जसमा उनी सधैं रहनेछन् । अल्लाह (तआला) उनीसित प्रसन्न भयो[1] तथा यिनीहरू त्यससित ।[2] यो हो त्यसका लागि जो आफ्ना प्रभुसित तर्सन्छ ।[3]

## सुरतुज़ ज़िल्ज़ाल-९९

سُورَةُ الزَّلۡزَلَةِ

सूरतुज़ ज़िल्ज़ाल मदीनामा अवतरित भएको तथा यसमा आठ आयत छन् ।

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

---

अल्लाहको विशेषण البَارِي हो । यसकारण بَرِيَّة वास्तवमा بَرِيئَة हो हम्ज़ालाई 'या' मा बदलियो अनि 'या' लाई 'या' मा सन्धि गरिदियो ।

[1]उनका ईमान, पुण्यका कर्म तथा अनुज्ञाका कारण तथा अल्लाहको प्रसन्नता सबैभन्दा महान छ । ﴿وَرِضۡوَٰنٞ مِّنَ ٱللَّهِ أَكۡبَرُ﴾ (अत्तौबः-७२)

[2]यसकारण कि अल्लाहले उनलाई त्यस्ता उपहारबाट सम्मानित गरिदियो जसमा उनको आत्मा तथा शरीर दुवैको सौभाग्य छ ।

[3]अर्थात् यो पुरस्कार तथा प्रसन्नता ती मानिसहरूका लागि छ जो संसारमा अल्लाहसित तर्सिरहन्छन् तथा यस भयका कारण अल्लाहको अवज्ञाबाट बच्दछन् । यदि कुनै समय मानवीय अभियाचनाका कारण अवज्ञा भइहालेको छ भने क्षमा याचना गरे । तथा भविष्यका लागि आफ्नो सुधार गरिहाले यहाँसम्मकि उनको मृत्यु यसै आज्ञापालनमा भयो न कि अवज्ञामा । यसको अर्थ यो हो कि जो अल्लाहको भय राख्दछ त्यो अवज्ञामा दुराग्रह गर्दैन न त्यसमा स्थिर रहन्छ । तथा जो यस्तो गर्दछ वास्तवमा त्यसको हृदय अल्लाहका भयबाट शून्य हुन्छ ।

***सूरतुज ज़िल्ज़ाल:*** यसको मक्की अथवा मदनी हुने कुरोमा मतभेद छ । यसको प्रधानतामा कैयन् रिवायतहरू छन् किन्तु (उनमा) उनीमध्ये कुनै पनि सही छैन

| | |
|---|---|
| (१) जब धर्ती पूर्णरुपले कम्पित गरिदिनेछ ।[1] | إِذَا زُلْزِلَتِ الْأَرْضُ زِلْزَالَهَا ① |
| (२) तथा आफ्ना बोझ बाहिर निकाली बाहिर फ्याँक्नेछ ।[2] | وَأَخْرَجَتِ الْأَرْضُ أَثْقَالَهَا ② |
| (३) तथा मनुष्य भन्नथाल्नेछ कि त्यसलाई के भयो ?[3] | وَقَالَ الْإِنسَانُ مَا لَهَا ③ |
| (४) त्यसदिन धर्ती आफ्नो सबै सूचनाहरू वर्णन गरिदिनेछ ।[4] | يَوْمَئِذٍ تُحَدِّثُ أَخْبَارَهَا ④ |
| (५) यसकारण कि तिम्रो प्रभुले त्यसलाई आदेश दिएको हुनेछ ।[5] | بِأَنَّ رَبَّكَ أَوْحَىٰ لَهَا ⑤ |

[1]यसको अभिप्राय यो हो कि प्रचण्ड भूईँचालोले धर्ती काम्नेछ । तथा प्रत्येक कुरो क्षत-विक्षत हुनेछ । यो समय हुनेछ जब पहिलो नफ़ख़ (फूँक) हुनेछ ।

[2]अर्थात् धर्तीमा जति मानिस गाडिएका छन् उनी धर्तीका बोझ हुन् जसलाई धर्तीले क़ेयामतका दिन निकाली फ्याँक्नेछ । अर्थात् अल्लाहका आदेशले सबै जीवित भई बाहिर निस्कनेछन् यो दोस्रो नफ़ख़ (फूँक) मा हुनेछ । यसप्रकार धर्तीका कोष पनि बाहिर निस्कि आउनेछ ।

[3]अर्थात् भयभीत भई भन्नेछ यसलाई के भएको छ ? यो किन यसप्रकार हल्लिरहेको छ तथा आफ्ना कोष ओकलिरहेको छ ।

[4]यो शर्तको उत्तर हो । हदीसमा छ नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले यो आयत पढ्नभयो तथा प्रश्न गर्नुभयो, थाहा छ धर्तीका सूचनाहरू के हुन् ? सहाबाले उत्तर दिए अल्लाह तथा उहाँ रसूल उचित प्रकारले जान्दछन् । उहाँले भन्नुभयो: त्यसका सूचनाहरू यो हुन् कि जुन दास अथवा दासीनीले धर्तीमाथि जे-जति गरेका हुनेछन् त्यसको साक्ष्य दिनेछ । भन्नेछ अमुक-अमुक व्यक्तिले अमुक-अमुक कर्म अमुक-अमुक दिन गरेका थिए । (तिर्मिज़ी अबवाबु सिफ़ातिल क़ियाम: तथा तफ़सीर इजा जुलज़िलत, मुसनद अहमद २/३७४)

[5]अर्थात् धर्तीलाई यो भन्नुको शक्ति अल्लाहले प्रदान गर्नेछ । यसकारण यसमा आश्चर्यको कुरो छैन । (जस्तो मानवीय अंगहरूमा यो शक्ति पैदा गरिदिनेछ) धर्तीलाई पनि अल्लाह (तआ़ला) भन्नेवाली बनाइदिनेछ तथा त्यसले त्यसको आज्ञाले बोल्नेछ ।

يَوْمَئِذٍ يَصْدُرُ النَّاسُ أَشْتَاتًا لِّيُرَوْا أَعْمَالَهُمْ ⑥

(६) त्यस दिन मानिस विभिन्न समूहहरूमा भई फर्कनेछन्[१] ताकि उनीहरूलाई कर्म देखाइयून्।[२]

فَمَن يَعْمَلْ مِثْقَالَ ذَرَّةٍ خَيْرًا يَرَهُ ⑦

(७) त जसले कणका समतुल्य पनि पुण्य गरेको हुनेछ त्यसले त्यसलाई देखिहाल्नेछ।[३]

وَمَن يَعْمَلْ مِثْقَالَ ذَرَّةٍ شَرًّا يَرَهُ ⑧

(८) तथा जसले कणका समतुल्य पनि पाप गरेको हुनेछ त्यसले त्यसलाई देखिहाल्नेछ।[४]



[१] يَصْدُرُ (फर्कनेछन्) यो وُرُود को विलाम हो। अर्थात् चिहानहरूबाट निस्केर हिसाबका स्थानतिर अथवा हिसाबका पश्चात स्वर्ग तथा नरकतिर फर्कनेछन्। أَشْتَاتًا अलग-अलग समूहहरूमा केही भयभीत हुनेछन् केही निर्भय। केहीका रङ्ग सेता हुनेछन् जस्तो स्वर्गवासीहरूका हुनेछन्। केहीका काला जो उनका नरकीय हुने कुराको चिन्ह हुनेछ। केहीका मुख दायाँतिर हुनेछ केहीको बायाँतिर अथवा उनी विभिन्न समूह धर्म तथा मत एवं कर्महरूको आधारमा हुनेछन्।

[२]यसको सम्बन्ध يَصْدُرُ सित छ अथवा أَوْحَىٰ لَهَا सित छ। अथवा धर्ती आफ्ना सूचनाहरू यसकारण दिनेछ ताकि मनुष्यहरूलाई उनका कर्म देखाइयोस्।

[३]तथा त्यो त्यसबाट प्रसन्न हुनेछ।

[४]त्यो यसमाथि अति लज्जित तथा व्याकुल हुनेछ। ذَرَّةٍ केहीका विचारमा कमिलाभन्दा पनि सानो कुरो केहीका विचारले धर्तीमा हात बजार्नाले जुन धूलो हातहरूमा लाग्दछ, त्यो ذَرَّةٍ हो। केहीका निकट छिद्रबाट जो सूर्यको किरण आउँछ त्यसमा जुन धूलोका कण देखिन्छन् त्यो ذَرَّةٍ हो। परन्तु इमाम शौकानीले प्रथम अर्थलाई उत्तम मानेका छन्। इमाम मुकातिल भन्दछन् कि यो आयत ती दुई व्यक्तिहरूको विषयमा उतरेको छ जसमध्ये एउटा भिखारीलाई अलिकति दान दिनुमा संकोच गर्दछ तथा दोस्रो सानो पाप गर्नुमा कुनै भय गर्दैनथ्यो। (फ़तहुल क़दीर)

## सूरतुल आदियात १००

سُوْرَةُ الْعٰدِيٰتِ

सूरतुल आदियात मक्कामा अवतरित भएको तथा यसमा एघार आयत छन् ।

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

وَالْعٰدِيٰتِ ضَبْحًا ۙ﴿۱﴾

(१) स्वाँ-स्वाँ गर्दै दगुर्ने घोडाहरूको सौगन्ध ।[१]

فَالْمُوْرِيٰتِ قَدْحًا ۙ﴿۲﴾

(२) अनि (खुट्टाको) टाप बजारेर फिलिङ्गो निकाल्नेहरूको सौगन्ध ।[२]

فَالْمُغِيْرٰتِ صُبْحًا ۙ﴿۳﴾

(३) अनि प्रातः कालमा धावा बोल्नेहरूको कसम ।[३]

فَاَثَرْنَ بِهٖ نَقْعًا ۙ﴿۴﴾

(४) त त्यस समय धूलो उडाउँछन् ।[४]

---

[१] *सूरतुल आदियात:* عَادِيَات यो عَادِيَةٌ को बहुवचन हो । यो عَدْوٌ बाट छ जस्तै غَزْوٌ हो غَازِيَاتٌ का समान त्यसका 'वाव' लाई पनि 'यी' सित बदलिदियो । वेगगामी घोडाहरू ضَبْحٌ को अर्थ केहीले स्याँ-स्याँ गर्नु लिएका छन् तथा केहीले हिनहिनाउनु । तात्पर्य ती घोडा हुन् जो स्याँ-स्याँ अथवा हिन्हिनाउँदै धर्मयुद्धमा शत्रुतिर दगुछन् ।

[२] مُورِيَات बनेको छ إِيرَاءٌ बाट आगो निकाल्नेवाला قَدْحٌ को अर्थ صَكٌّ हो । हिंडदा घूँडा अथवा कुरकुच्चाको ठक्कर मार्नु अथवा टाप मार्नु । यसैबाट قَدْحٌ بِالزِّنَادِ छ । पत्थर (चकमा) बाट आगो निस्कनु अर्थात् ती घोडाहरूको सौगन्ध छ जसका टापहरूको घर्षनले पत्थरहरूबाट आगो निस्कन्छ । जस्तो चक्मातबाट निस्कन्छ ।

[३] مُغِيرَاتٌ लिएको छ أَغَارَ يُغِيرُ बाट रातमा आक्रमण गर्नु अथवा धावा बोल्नेहरू صُبْحًا बिहानीको समय अरबमा साधारणतः आक्रमण यसै समय गरिन्थ्यो । निशाक्रमण त उनी गर्दछन् जो सैनिक घोडाहरूमा सवार हुन्छन् । परन्तु यसलाई घोडाहरुसँग सम्बन्धित यसकारण गरिएको छ कि धावा बोल्नुमा यिनी सैनिकहरुका धेरै काम आउँछन् ।

[४] أَثَارَ (उडाउनु) نَقْعٌ धूलो । अर्थात् जुन समय यी घोडा तीब्र गतिले दगुरछन् अथवा धावा बोल्दछन् त त्यस स्थानमा धूलो छाउँछ ।

فَوَسَطْنَ بِهِۦ جَمْعًا ۝٥

(५) अनि त्यसैका साथ सेनाहरूका माझ छिर्दछन् ।[1]

إِنَّ ٱلْإِنسَٰنَ لِرَبِّهِۦ لَكَنُودٌ ۝٦

(६) निःसन्देह मनुष्य आफ्ना प्रभुको अति कृतघ्न छ ।[2]

وَإِنَّهُۥ عَلَىٰ ذَٰلِكَ لَشَهِيدٌ ۝٧

(७) तथा निश्चित रुपले त्यो स्वयं पनि त्यसमाथि साक्षी छ ।[3]

وَإِنَّهُۥ لِحُبِّ ٱلْخَيْرِ لَشَدِيدٌ ۝٨

(८) तथा यी मालका प्रेममा अति कठोर छ ।[4]

أَفَلَا يَعْلَمُ إِذَا بُعْثِرَ مَا فِى ٱلْقُبُورِ ۝٩

(९) के त्यसलाई त्यो समय ज्ञात छैन, जब कब्रहरूमा जे-जति छ निकालदिइनेछ ।[5]

وَحُصِّلَ مَا فِى ٱلصُّدُورِ ۝١٠

(१०) तथा छातिमा लुकेका कुरालाई प्रकट गरिदिइनेछ ।[6]

---

[1] فَوَسَطْن मध्यमा छिर्छन्, त्यस समय अथवा धूलको अवस्थामा جَمْعًا शत्रुको सेना अभिप्राय छ कि त्यस समय अथवा जब वातावरण धूल-कणले भरिएको हुन्छ । यी घोडा शत्रुको सेनामा पस्दछन् तथा घमासानको युद्ध लड्छन् ।

[2] यो सौगन्धको उत्तर हो । मानिससित अभिप्राय काफ़िर, अर्थात् केही मानिस हुन् । كَنُود को अर्थ كَفُور (कृतघ्न) छ ।

[3] अर्थात् मानिस स्वयं आफ्नो कृतघ्नताको साक्षी छ । केही विद्वान لَشَهِيد को कर्ता अल्लाहलाई मान्दछन् । परन्तु इमाम शौकानीले प्रथम अर्थलाई प्रधानता दिएका छन् । किनकि पछिका आयतहरूमा सर्वनाम मानिसतिरै फर्कन्छ यसकारण यहाँ पनि मानिस हुनु अधिक सही छ ।

[4] خَيْر सित तात्पर्य धन हो । जस्तै ﴿إِن تَرَكَ خَيْرًا الْوَصِيَّةُ﴾ (सूरः अल-बकरः १८०) मा छ, अर्थ स्पष्ट छ । एक अन्य भावार्थ यो हो कि अति कृपण तथा लोभी छ जो धनका प्रेमको अनिवार्य परिणाम हो ।

[5] بُعْثِرَ بُعِث و نُثِر अर्थात् चिहानहरूका मूर्दाहरूलाई जीवित गरी उभ्याइनेछ ।

[6] حُصِّلَ مُيِّزَ وبُيِّنَ अन्तः करणका कुराहरूलाई खोलेर व्यक्त गरिदिइनेछ ।

إِنَّ رَبَّهُم بِهِمْ يَوْمَئِذٍ لَّخَبِيرٌ ⑪

(११) निःसन्देह उनको प्रभु त्यसदिन उनका अवस्थासित पूर्णरुपले परिचित हुनेछ ।[1]

## سُورَةُ القَارِعَةِ

## सूरतुल कारिअः १०१

सूरतुल क़ारिअः मक्कामा अवतरित भएको तथा यसमा एघार आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु, तथा अत्यन्त कृपालु छ ।

الْقَارِعَةُ ①

(१) खडखड दिनेवाली (चर्को स्वर गर्ने) ?[2]

مَا الْقَارِعَةُ ②

(२) के हो त्यो चर्को स्वर दिनेवाली ?

وَمَا أَدْرَاكَ مَا الْقَارِعَةُ ③

(३) तिमीलाई के थाहा कि त्यो चर्को स्वर दिनेवाली के हो ?

يَوْمَ يَكُونُ النَّاسُ كَالْفَرَاشِ الْمَبْثُوثِ ④

(४) जुन दिन मनुष्य छरिएका भुसुनाहरू जस्तो हुन जानेछन् ।[3]

---

[1]अर्थात् जुन प्रभुले उनीहरूलाई चिहानहरूबाट निकाल्नेछ उनका मनमा कुरा प्रकाशमा ल्याउनेछ । त्यो कति जानकार हुनसक्दछ । अनि त्यसैले प्रत्येकलाई त्यसका कर्मानुसार बदला दिनेछ । यो मानौं उनलाई चेतावनी हो जो प्रभुका उपकारहरूको कृतघ्नता गर्दछन् तथा मालका प्रेममा अरुहरूको अधिकार पूरा गर्दैनन् जो अल्लाहले अरुहरूका लागि राखेको छ ।

[2]*सूरतुल क़ारिअः* यो पनि प्रलयका नामहरूमध्ये एउटा नाम हो जस्तै यसभन्दा पूर्व यसका अनेक नाम गुज्रिसकेका छन् जस्तै الحَاقَّةُ। अल हाक्कः الطَّامَّةُ अततामम्ः الصَّاخَّةُ अससाखः الغَاشِيَةُ अलगाशियः, असूसाअः الوَاقِعَةُ अलवाकियः आदि । अलकारिअः यसलाई यसकारण भन्दछन् कि यो आफ्नो भयानकताका कारण हृदयहरूलाई भयभीत तथा अल्लाहका शत्रुहरूलाई यातनाबाट सूचित गर्नेछ जस्तै द्वार घच्घच्याउने गर्दछ ।

[3]فَرَاش दीपको पास भ्रमित भुसुनाहरू आदि مَبْثُوث फैलिएका तथा छरिएका । अर्थात् केयामतका दिन मनुष्य पनि भुसुनाहरू सरह फैलिएका तथा छरिएका हुन्छन् ।

وَتَكُونُ الْجِبَالُ كَالْعِهْنِ الْمَنفُوشِ ⑤

(५) तथा पर्वत धुनिएका रङ्गीन ऊन सरह हुनेछन् ।[1]

فَأَمَّا مَن ثَقُلَتْ مَوَازِينُهُ ⑥

(६) अनि जसका पलरा भारी हुनेछ ।[2]

فَهُوَ فِي عِيشَةٍ رَّاضِيَةٍ ⑦

(७) त्यो त अत्यन्त सुखदायी जीवनमा हुनेछ ।[3]

وَأَمَّا مَنْ خَفَّتْ مَوَازِينُهُ ⑧

(८) तथा जसका पलरा हलुङ्गो हुनेछन् ।[4]

فَأُمُّهُ هَاوِيَةٌ ⑨

(९) त्यसको वासस्थान "हावीया" छ ।[5]

---

[1] عِهْن त्यस ऊनलाई भन्दछन् जो अनेकौं रङ्गमा रङ्गिएका हुन्छन् । مَنفُوش धुनिएका। यो पर्वतहरूको स्थिति भनिएको छ जो प्रलयका दिन तिनको हुनेछ । पवित्र कुरआनमा पर्वतहरूको यो स्थिति अनेक रुपले वर्णन गरिएको छ जसको विवरण गुज्रिसकेको छ । अब अगाडि दुई समूहको संक्षिप्त वर्णन गरिंदैछ । जो प्रलयका दिन कर्मानुसार हुनेछन् ।

[2] مَوَازِين बहुवचन مِيزَان को हो तराजू (तुला) जसमा कर्मपत्र तौलने छन् । जस्तो कि यसको चर्चा सूरतुल आराफ़ (आयत-८) सूरतुल कहफ़ (१०५) तथा सूरतुल अम्बिया (४७) मा पनि गुज्रेको छ । केही विद्वान्हरू भन्छन् कि यो मीज़ान होइन मौजूनको बहुवचन हो अर्थात् यस्ता कर्म जसका अल्लाहकहाँ कुनै महत्व तथा विशेष वजन हुनेछ । (फ़तहुल क़दीर) किन्तु पहिलो अर्थ उचित तथा सही छ । अभिप्राय यो हो कि जसका पुण्य अधिक हुनेछन् तथा कर्महरूको जोखिनुको समय उनको पलरा भारी हुनेछ ।

[3]अर्थात् यस्तो जीवन जसलाई जीवित व्यक्तिले प्रिय मान्नेछ ।

[4]अर्थात् जसका पाप, पुण्यहरूभन्दा अधिक हुनेछ तथा पापहरूको पलरा भारी एवं पुण्यको हलुङ्गो हुनेछ ।

[5] هَاوِيَة नरकको नाम हो । त्यसलाई हावीया यसकारण भन्दछन् कि नरकवासीहरु त्यसको गहिराईमा खस्नेछ । तथा त्यसलाई أُم (आमा) यसकारण व्यञ्जित गरियो जुनप्रकार आमा बच्चाहरूका लागि शरणोगार हुन्छ यसैप्रकार नरकका पात्र हुनेहरूको शरणागर नरक हुनेछ । केही विद्वानहरू भन्छन् कि أُم को अर्थ दिमाग हुन्छ । नरकवासीहरु नरकमा टाउको तल पारी हालिनेछन् (इब्ने क़सीर)

وَمَآ أَدۡرَىٰكَ مَا هِيَهۡ ١٠

(१०) तिमीलाई के थाहा कि त्यो के हो ?[1]

نَارٌ حَامِيَةُۢ ١١

(११) त्यो अति तीव्र प्रज्वलित अग्नि हो ।[2]

## सूरतुत तकासुर-१०२

سُورَةُ التَّكَاثُرِ

सूरतुत तकासुर मक्कामा अवतरित भएको तथा यसमा आठ आयत छन् ।

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

أَلۡهَىٰكُمُ ٱلتَّكَاثُرُ ١

(१) अधिकताका प्रेमले तिमीलाई अचेत गरिदियो ।[3]

[1]यो प्रश्न त्यसको गम्भीरता तथा भयानकता देखाउनका लागि छ, कि त्यो मानवीय विचार एवं कल्पनाभन्दा उच्च छ । मानवं ज्ञान त्यसलाई घेर्न सक्दैन न त्यसको यथार्थता जान्न सक्दछन् ।

[2]जस्तो हदीसमा छ कि मनुष्य संसारमा जो आगो बाल्छ यो नरकको आगोको सत्तरीयौं भाग हो । नरकको आगो संसारको आगोभन्दा उनहत्तर गुना अधिक छ । (सहीह अलबुखारी, किताबु वदइल ख़ल्क़, बाबु सिफ़ातिन्नारे व अन्नहा मख़लूकह, मुस्लिम किताबुल जन्नते, बाबुन फी शिद्दती हर्रे नारे जहन्नम) एउटा अन्य हदीसमा छ कि आगोले आफ्ना प्रभुसित शिकायत गऱ्यो कि मेरो एक भाग अर्को भागलाई खाँदै गईराखेको छ अल्लाहले त्यसलाई दुई श्वास लिनुको अनुमति प्रदान गरिदिया । एउटा श्वास गर्मीमा अर्को श्वास जाडोमा । अत: जो कडी शीत हुनेछ, त्यो त्यसको शीतल साँस हो तथा जुन कडा गर्मी पर्दछ, त्यो त्यसको गरम साँस हो (बुखारी उपरोक्त अध्यय) एउटा अन्य हदीसमा नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले भन्नुभयो : जब गर्मी अधिक कडा हुन्छ त नमाज शीतल पारेर पढ । यसकारण कि कडा गर्मी नरक उम्लिनुको कारण पैदा हुन्छ । (उपरोक्त सन्दर्भ, मुस्लिम किताबुल मसाजिद)

[3]*सुरतुत तकासुर:* أَلْهَى يُلْهِي को अर्थ हो निश्चित गरिदिनु । تَكَاثُر अधिकको अभिलाषा, यो सामान्य हो । धन, सन्तान, सहायक, समर्थक, परिवार, जाति सबैलाई सम्मिलित छ । प्रत्येक त्यो वस्तु जसको अधिकता मनुष्यलाई प्रिय छ । तथा अधिकताको प्राप्तिको ।

(२) यहाँसम्मकि तिमी कब्रस्तान पुग्यौ ।[१]

حَتّٰى زُرْتُمُ الْمَقَابِرَ ﴿٢﴾

(३) कदापि– होइन[२] तिमी शीघ्र नै ज्ञात गरिहाल्नेछौ ।

كَلَّا سَوْفَ تَعْلَمُوْنَ ﴿٣﴾

(४) पुनः कदापि होइन तिमीलाई शीघ्र नै ज्ञात भइहाल्नेछ ।[३]

ثُمَّ كَلَّا سَوْفَ تَعْلَمُوْنَ ﴿٤﴾

(५) कदापि होइन यदि तिमी निश्चित रुपले जानिहाल्छौ ।[४]

كَلَّا لَوْ تَعْلَمُوْنَ عِلْمَ الْيَقِيْنِ ﴿٥﴾

(६) त निःसन्देह तिमीले नरक देखिहाल्नेछौ ।[५]

لَتَرَوُنَّ الْجَحِيْمَ ﴿٦﴾

(७) तिमीले त्यसलाई विश्वासका नेत्रले देख्नेछौ ।[६]

ثُمَّ لَتَرَوُنَّهَا عَيْنَ الْيَقِيْنِ ﴿٧﴾

---

प्रयास तथा आकांक्षाले त्यसलाई अल्लाहको आदेशहरू एवं परलोकबाट विमुख गरिदिन्छ । यहाँ अल्लाहले मनुष्यको कमजोरी बताइराखेको छ जसमा अधिकांश मनुष्य प्रत्येक युगमा ग्रस्त रहेका छन् ।

[१]यसको अर्थ यो प्राचुर्य प्राप्त गर्नका लागि परिश्रम गर्दागर्दै तिमीलाई मृत्यु आइहाल्यो तथा तिमी समाधि स्थलहरू (कब्रहरू) मा गइपुग्यो ।

[२]तिमी जुन अधिकताको आकांक्षा तथा परस्पर गर्वमा लीन छौ यो सही होइन ।

[३]यसको परिणाम तिमीले शीघ्र नै जानिहाल्नेछौ, यो जोड दिनका लागि दुईपटक भन्यो ।

[४]यसको उत्तर छिप्त छ । अभिप्राय यो हो कि तिमी यस विमुखताको परिणाम यसप्रकार निश्चित रुपले जानीहाल जुनप्रकार संसारको कुनै देखिएको कुराको तिमीलाई विश्वास हुन्छ । त तिमी यस अधिकताका प्रयास तथा परस्पर गर्वमा नपर ।

[५]यो लुप्त सौगन्धको उत्तर हो । अर्थात् अल्लाहको सौगन्ध तिमीले नरक अवश्य देख्नेछौ अर्थात् त्यसको यातना भोग्नेछौ ।

[६]पहिला हेराइ टाढाबाट हुनेछ । यो हेराइ समीपबाट हुनेछ यसकारण यसलाई عَيْنَ الْيَقِيْن जसको विश्वास आँखाले हेरेर गरिएको छ । भनिएको छ ।

ثُمَّ لَتُسْـَٔلُنَّ يَوْمَئِذٍ عَنِ النَّعِيمِ ۝٨

(८) अनि त्यस दिन तिमीसित अवश्य-अवश्य उपहारहरूको प्रश्न हुनेछ ।[1]

سُورَةُ الْعَصْرِ

## सूरतुल अस्र-१०३

सूरतुल अस्र मक्कामा अवतरित भएको तथा यसमा तीन आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त कृपालु तथा दयालु हुनुहुन्छ ।

وَالْعَصْرِ ۝١

(१) कालको सौगन्ध ।[2]

إِنَّ الْإِنسَانَ لَفِي خُسْرٍ ۝٢

(२) वास्तवमा समस्त मनुष्य सर्वथा घाटामा छ ।[3]

[1]यो प्रश्न ती नियमत (अनुकम्पाहरू) का बारेमा हुनेछ जो अल्लाहले संसारमा दिएको छ । जस्तै आँखा, कान, हृदय,शान्ति, स्वास्थ्य, धन, सम्पत्ति तथा सन्तान आदि केही ज्ञाताहरू भन्छन् कि प्रश्न केवल काफ़िरहरूसित हुनेछ । केही भन्दछन् कि प्रत्येकसितै हुनेछ किनकि केवल प्रश्न नै यातनाको कारण हुनेछैन । जसले अनुग्रहको प्रयोग अल्लाहको आदेशहरूका अधीन रहेर गरेको हुनेछ ती प्रश्नका उपरान्त पनि यातनाबाट सुरक्षित रहनेछन् तथा जसले कृतघ्नता गरेका हुनेछन् ती समातिइ हाल्नेछन् ।

[2]***सूरतुल अस्र:*** युगसित अभिप्राय रात-दिनको त्यो चक्र हो तथा फेर-बदल गरेर आउनु । रात आउँछ त अन्धकार हुनजान्छ तथा दिनबाट प्रत्येक वस्तु प्रकाशित हुनजान्छ । यसका अतिरिक्त कहिले रात लामो तथा दिन छोटो एवं कहिले दिन लामो तथा रात छोटो हुनजान्छ । यदि दिनहरूको यही चक्कर युग हो जो अल्लाहको पूर्ण शक्ति तथा सामर्थ्यको संकेत दिन्छ । अत: पालनकर्ताले त्यसको शपथ लिएको छ । यो पहिला भनिसकिएको छ कि अल्लाह त आफ्ना सृष्टिमध्ये जसको चाहन्छ शपथ ग्रहण गर्न सक्दछ । किन्तु मानिसका लागि अल्लाहका अतिरिक्त कसैको सौगन्ध खानु वैध छैन ।

[3]यो सौगन्धको उत्तर हो । मानिसको क्षति एवं विनाश स्पष्ट छ कि जबसम्म त्यो जीवित रहन्छ त्यसका दिन घोर परिश्रममा व्यतीत हुन्छ । अनि जब मरेर जान्छ त मृत्युका पश्चात पनि सुख पाउँदैन । बरु त्यो नरकको इन्धन बन्दछ ।

إِلَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ وَتَوَاصَوْا بِالْحَقِّ وَتَوَاصَوْا بِالصَّبْرِ ③

(३) उनका अतिरिक्त जसले ईमान स्वीकार गरे तथा पुण्यकारी कार्य गरे[1] तथा (जसले) आपसमा सत्यको वसीयत गरे[2] तथा एक-अर्कालाई धैर्य राख्नुको उपदेश दिए ।[3]

## सूरतुल हुमजः-१०४

سُورَةُ الْهُمَزَةِ

सूरतुल हम्जः मक्कामा अवतरित भयो तथा यसमा नौ आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

وَيْلٌ لِكُلِّ هُمَزَةٍ لُمَزَةٍ ①

(१) ठूलो खराबी छ त्यस व्यक्तिको जो त्रुटि खोज्ने चुक्लि गर्नेछ ।[4]

[1]हो यस घाटाबाट ती मानिस सुरक्षित छन् जो ईमान तथा पुण्यका कर्मले युक्त छन् मृत्युका पश्चात वस्तुतः अनन्त प्रदानहरू तथा स्वर्गका सुखद जीवनबाट सफल हुनेछन् । अगाडि ईमान भएकाहरूका अन्य सद्‌गुणहरूको चर्चा छ ।

[2]अर्थात् अल्लाहका धर्म विधानहरूको पालन तथा अवैधानिक एवं अवज्ञाबाट बच्नुको सदुपदेश ।

[3]अर्थात् दुःख तथा अपवादहरूमाथि धैर्य धर्मका आदेश तथा विधानहरूको पालन गर्नुमा धैर्य । अवज्ञाबाट बच्नु, स्वार्थ तथा आकांक्षाहरूका त्यागमाथि धैर्य । धैर्यपनि यद्यपि सत्यका सदुपदेशमा सम्मिलित छ तैपनि विशेषरुपले त्यसको अलगबाट चर्चा गरिएको छ जसबाट त्यसको प्रधानता तथा प्रतिष्ठा स्पष्ट छ ।

[4]**सूरतुल हुमजः** هُمَزَة तथा لُمَزَة केही विद्वानहरूका विचारमा पर्यायवाची हुन्, केही त्यसमा केही अन्तर गर्दछन् । हुमजः त्यो व्यक्ति जो अगाडि त्रुटि निकाल्छ तथा लुमजः पिठ्यूँ पछाडि छिद्र अन्वेषण गर्दछ । केही यसभन्दा विपरीत अर्थ भन्दछन् । केही भन्दछन् हुमजः आँखा तथा हातहरूका संकेतले चुग्लि, त्रुटि गर्नु तथा लुमजः जिभ्रो (मुख) ले ।

| | |
|---|---|
| (२) जो माललाई एकत्रित गर्दैजान्छ तथा गन्दैजान्छ ।[1] | الَّذِىْ جَمَعَ مَالًا وَّعَدَّدَهٗ ﴿٢﴾ |
| (३) त्यो ठान्दछ कि त्यसको माल त्यसका पास सधैं रहनेछ ।[2] | يَحْسَبُ اَنَّ مَالَهٗۤ اَخْلَدَهٗ ﴿٣﴾ |
| (४) कदापि होइन[3] यो त अवश्य तोडफोड दिनेवाली अग्निमा फ्याँकिदिइनेछ ।[4] | كَلَّا لَيُنْۢبَذَنَّ فِى الْحُطَمَةِ ﴿٤﴾ |
| (५) तथा तिमीलाई के थाहा कि यस्तो अग्नि के हुनेछ ?[5] | وَمَاۤ اَدْرٰىكَ مَا الْحُطَمَةُ ﴿٥﴾ |
| (६) त्यो अल्लाह (तआ़ला) को सल्काइएको आगो हुनेछ । | نَارُ اللّٰهِ الْمُوْقَدَةُ ﴿٦﴾ |
| (७) जो हृदयमा चढ्दै अगाडि जानेछ ।[6] | الَّتِىْ تَطَّلِعُ عَلَى الْاَفْـِٕدَةِ ﴿٧﴾ |

[1]यसबाट अभिप्राय यही हो एकत्रित गर्नु तथा गनि-गनि राख्नु अर्थात् समेटी जम्मा गरी राख्नु तथा अल्लाहको बाटोमा खर्च नगर्नु । अन्यथा धन राख्नु निषेध छैन यो त्यसैबेला निहित छ जब ज़कात सदका (दान) तथा अल्लाहका मार्गमा व्यय गर्नुको प्रबन्ध नहोस् ।

[2] أَخلَدَه को अधिक उचित अनुवाद यो हो कि त्यसलाई सधैं जीवित राख्नेछ अर्थात् यो धन जसलाई त्यो एकत्र गरेर राख्दछ त्यसको आयु बढाइदिनेछ तथा मर्न दिनेछैन ।

[3]अर्थात् मामिला यस्तो छैन जस्तो कि उनको विचार तथा अनुमान छ ।

[4]अर्थात् यस्तो कन्जुस व्यक्ति حُطَمَة मा फ्याँकिदिइनेछ । यो पनि नरकको एउटा नाम हो तोड-फोड दिनेवाली ।

[5]यो प्रश्न त्यसको भयानकता देखाउनका लागि छ कि तिमी त्यसको ज्ञान गर्न सक्दैनौ तथा तिम्रो बुद्धि त्यसको गहिराईसम्म पुग्न सक्दैन ।

[6]अर्थात् त्यसको ताप हृदयसम्म पुग्नेछ । त्यसो त संसारको आगोमा पनि यो विशेषता छ कि त्यसले प्रत्येक वस्तुलाई जलाइदिन्छ । परन्तु संसारमा यो आगो हृदयसम्म पुग्दैन कि मानिसको मृत्यु यसभन्दा पहिले हुनजान्छ । नरकमा यस्तो हुनेछैन,

إِنَّهَا عَلَيْهِم مُّؤْصَدَةٌ ۝٨ فِي عَمَدٍ مُّمَدَّدَةٍ ۝٩

(८) तथा उनीमाथि ठूला-ठूला स्तम्भमा ।

(९) हरेक तर्फबाट बन्द गरिएको हुनेछ ।[1]

سُورَةُ الْفِيلِ

## सूरतुल फ़ील-१०५

सूरतुल फ़ील मक्कामा अवतरित भएको तथा यसमा पाँच आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु यो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

أَلَمْ تَرَ كَيْفَ فَعَلَ رَبُّكَ بِأَصْحَابِ الْفِيلِ ۝١

(१) के तिमीले देखेनौ कि तिम्रा प्रभुले हाथी भएकाहरूसँग के गऱ्यो ।[2]

हुनेछ, त्यो आगो हृदयसम्म पनि पुग्नेछ किन्तु मृत्यु हुनेछैन अपितु कामनाका उपरान्त पनि मृत्यु आउने छैन ।

[1] مُّؤْصَدَةٌ (बन्द) अर्थात् नरकका द्वार तथा मार्ग बन्द गरिदिइनेछन् ताकि कोही बाहिर निस्कन नसकोस् तथा उनीहरूलाई फलामको किलासित बाँधिदिनेछ जो लामा-लामा स्तम्भहरूका समान हुनेछ । केही ज्ञाताहरूका विचारमा عَمَد सित अभिप्राय नेल अथवा तौक हुन् । केहीका विचारमा स्तम्भ छन् । जसमा उनीहरूलाई यातना दिइनेछ (फ़तहुल क़दीर)

[2] ***सूरतुल फ़ील:*** जो यमनदेखि खानये काअबालाई ध्वस्त पार्न आएका थिए । أَلَمْ تَرَ को अर्थ हो أَلَمْ تَعْلَمْ के तिमीलाई ज्ञान छैन ? यो प्रश्न सकारात्मक छ । अर्थात् तिमी जान्दछौ वा ती सबै जान्दछन् जो तिम्रा समकालीन छन् । यो यसकारण भन्यो कि अरबमा यो घटना घटेको अहिले अधिक समय व्यतीत भएको थिएन । प्रचलित कथनानुसार यो घटना त्य समय घट्यो जुन वर्ष नबी (सल्लल्लाहु अलैहि व सल्लम) को जन्म भएको थियो यसकारण अरबमा त्यसका समाचार प्रसिद्ध तथा निरन्तर थिए । यो वाक्य संक्षेपमा यसप्रकार छ ।

***हात्तीवालाहरूको कथा:*** हब्शा (इथोपिया) का राजाको तर्फबाट यमनमा अबरहा अश्रम् गर्भरनर थियो । उसले सन्आमा एउटा ठूलो गिर्जा निर्माण गऱ्यो तथा यो प्रयत्न गऱ्यो कि मानिसहरू खानये काअबाका स्थानमा उपासना तथा हज्जका लागि यता आउने गरुन् । यो कुरा मक्कावासीहरू तथा अन्य अरब कबीलाहरूका लागि अति अप्रिय थियो । जस्तो कि उनीमध्ये एउटा व्यक्तिले अबराहाद्वारा बनाइएका उपासना गृहलाई मलले लीपदियो । जसबाट उसलाई सूचित गरियो कि कसैले यसप्रकार यस गिर्जालाई दूषित गरिदिएको छ । जसपश्चात

أَلَمْ يَجْعَلْ كَيْدَهُمْ فِي تَضْلِيلٍ ۝٢

(२) के उसले उनको दुष्प्रयोजनलाई अकारथ गरिदिएन ?[1]

وَأَرْسَلَ عَلَيْهِمْ طَيْرًا أَبَابِيلَ ۝٣

(३) तथा उनीमाथि पंक्षीहरुका समूह पठाइदिए ।[2]

تَرْمِيهِم بِحِجَارَةٍ مِّن سِجِّيلٍ ۝٤

(४) जो उनीहरुलाई माटो तथा पत्थरका ढुङ्गाहरु हानिराखेका थिए ।[3]

فَجَعَلَهُمْ كَعَصْفٍ مَّأْكُولٍ ۝٥

(५) त उनलाई खाइएको भुसको जस्तो गरिदियो ।[4]

उसले खानये काअबालाई ध्वस्त गर्नुको प्रयत्न गऱ्यो तथा एउटा ठूलो सेना लिएर मक्कामाथि आक्रमणका लागि प्रस्थान गऱ्यो जसमा केही हात्ती पनि त्यसका साथमा थिए । जब यो सेना मुहस्सिर उपत्यकाका नजिक पुग्यो त अल्लाहले पंक्षीहरुका समूह पठायो जसका चुच्चा तथा पन्जाहरुमा ढुङ्गाका टुक्राहरु थिए जो चना अथवा मसूरोका बराबर थिए, जुन सैनिकलाई यो ढुङ्गाको टुक्रा लाग्दथ्यो त्यो पग्लन्थ्यो तथा त्यसको मासु झर्थ्यो तथा अन्ततः मरिहाल्थ्यो । स्वयं अबरहाको पनि सन्आ पुग्दा-पुग्दा यही परिणाम भयो । यसप्रकार अल्लाहले आफ्ना घरको रक्षा गऱ्यो । मक्काका निकट पुगेर अबरहाको सेनाले नबी (सल्लल्लाहु अलैहि व सल्लम) का हजुरबाका, जो मक्काका मुख्य थियो ऊटहरुमाथि नियन्त्रण गरियो। जसपश्चात अब्दुल मुत्तलिबले आएर अबरहासित भन्यो कि तिमी मेरा ऊट फिर्ता गरिदेउ जो तिम्रा सैनिकहरुले समातेका छन् । शेष रहयो खानये काअबाको समस्या जसलाई ध्वस्त गर्नका लागि तिमी आएका छौ, त त्यो तिम्रो मामिला अल्लाहका साथ छ त्यही त्यसको रक्षक छ । त्यो उसैको घर हो तिमी जान तथा बैतुल्लाहको मालिक अल्लाह जानोस् । (ऐसरुत्तफ़ासीर)

[1]अर्थात् त्यो खानये काअबालाई ध्वस्त गर्नुको इरादाले आएको थियो । त्यसमा त्यसलाई विफल गरिदियो । यो सकारात्मक प्रश्न हो ।

[2] أَبَابِيل यो कुनै पंक्षीको नाम होइन यसको अर्थ हो समूह ।

[3] سِجِّيل माटोलाई आगोमा पकाइएर बनाइएका टुक्राहरु । यी साना-साना टुक्राहरुले तोपका गोला तथा बन्दुकका गोलीहरुभन्दा अधिक विनाशका काम गरे ।

[4]अर्थात् उनका शरीरका अंश यसप्रकार छरिए जस्तै खाइएको भुस जस्तो हुन्छ ।

سُوۡرَةُ قُرَيۡشٍ

## सूरतु कुरैश-१०६

सूरतुल कुरैश मक्कामा अवतरित भएको तथा यसमा चार आयत छन् ।

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

لِإِيلَٰفِ قُرَيۡشٍ ١

(१) कुरैशलाई प्रेम दिलाउनका लागि ।

إِۦلَٰفِهِمۡ رِحۡلَةَ ٱلشِّتَآءِ وَٱلصَّيۡفِ ٢

(२) (अर्थात) उनीहरुलाई जाडो तथा गर्मीको यात्राको अनुसेवी बनाउनका लागि ?[1]

فَلۡيَعۡبُدُواْ رَبَّ هَٰذَا ٱلۡبَيۡتِ ٣

(३) तसर्थ (त्यस धन्यवादमा) उनलाई आवश्यक छ कि यसै घरका प्रभुको इबादत गर्दैरहून् ।[2]

*सूरत कुरैश:* यसलाई सुरतुल ईलाफ पनि भन्दछन् । यसको सम्बन्ध पनि विगत सूरतसित छ ।

[1] إِيلَاف को अर्थ हो घुलमिल तथा अनुसेवी हुनु । अर्थात् यस कामबाट दु:ख तथा घृणा हटेर जानु । कुरैशको जीविकाको साधन व्यापार थियो । वर्षमा दुईपटक उनको काफिला व्यापारका लागि विदेश जान्थे तथा त्यहाँबाट व्यापारको सामग्री ल्याउँथ्यो । जाडोमा यमन जो गरम क्षेत्र थियो तथा गर्मीहरूमा शामतिर जो शीतल थियो । खानये काअबाका सेवक हुनुका कारण सम्पूर्ण अरबवासी उनको आदर गर्दथे यसकारण उनका काफ़िला (समुह) बिना रोक-टोक यात्रा गर्दथे । अल्लाह (तआला) यस सूरतमा कुरैशलाई भनिराखेको छ कि तिमी गर्मी तथा जाडोमा जुन दुई यात्रा गर्दछौ त हाम्रा यस अनुग्रहका कारण कि हामीले तिमीलाई मक्कामा शान्ति प्रदान गर्‍यौं तथा अरबवासीहरूमा आदरणीय बनायौं । यदि यो कुरा नभएको भए त तिम्रो यात्रा सम्भव थिएन तथा हात्तीवालाहरूलाई पनि हामीले यसैकारण नाश गर्‍यौं कि तिम्रो सम्मान पनि रहोस् तथा तिम्रा यात्राहरूको क्रम (पनि जसका तिमी अनुसेवी हौ) स्थिति रहोस् यदि अबराहा आफ्ना लक्ष्यमा सफल भएको भए त तिम्रो आदरमान पनि समाप्त हुन जान्थ्यो तथा यात्राक्रम पनि, यसकारण तिमीलाई आवश्यक छ कि मात्र बैतुल्लाहका प्रभुको उपासना गर ।

[2] उपरोक्त व्यापार तथा यात्राद्वारा ।

الَّذِيْٓ اَطْعَمَهُمْ مِّنْ جُوْعٍ ۙ وَّاٰمَنَهُمْ مِّنْ خَوْفٍ ۝

(४) जसले उनलाई भोकमा भोजन दियो तथा डर (एंव भय) मा शान्ति प्रदान गऱ्यो ।[1]

## सूरतुल माऊन-१०७

سُوْرَةُ الْمَاعُوْنِ

सूरतुल माऊन मक्कामा अवतरित भएको यसमा सात आयत छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

اَرَءَيْتَ الَّذِيْ يُكَذِّبُ بِالدِّيْنِ ۝

(१) के तिमीले (त्यसलाई पनि) देख्यौ जो प्रतिफल (का दिन) लाई झुठ्लाउँछ ।[2]

فَذٰلِكَ الَّذِيْ يَدُعُّ الْيَتِيْمَ ۝

(२) यही त्यो हो जो अनाथलाई धक्का दिन्छ ।[3]

---

[1]अरबमा हत्या तथा लूटपाट सामान्य थियो किन्तु मक्काका कुरैशलाई हरमका कारण जुन आदर-मान प्राप्त थियो, त्यसका कारण उनी भय तथा डरबाट सुरक्षित थिए ।

***सूरतुल माऊन*** : यस सूरतलाई सूरतद्दीन, सूरत अरऐत, तथा सूरतुल यतीम पनि भन्दछन् (फ़तहुल क़दीर)

[2]रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) लाई सम्बोधित गरिएको छ । तथा प्रश्नवाट अभिप्राय आश्चर्य व्यक्त गर्नु हो । رؤيت (हेर्नु) जान्नुका अर्थमा छ तथा دين सित तात्पर्य परलोकको हिसाब तथा प्रतिकार हो । केही विद्वानहरू भन्छन् कि वाक्यमा लोभ छ मूल वाक्य हो, के तिमीले त्यस व्यक्तिलाई चिन्यौ जो प्रतिफलका दिनलाई झुठ्लाउँछ । के त्यो आफ्नो यस कुरामा सही छ अथवा गलत ।

[3]यसकारण कि एक त कंजूस छ । दोस्रो प्रलयको इन्कार गर्नेवाला त यस्तो व्यक्तिले अनाथका साथ किन राम्रो व्यवहार गर्न सक्दछ ? जसका हृदयमा धनको ठाउँमा मानवीय मूल्य तथा नैतिक नियमहरूको महत्व एवं प्रेम हुनेछ त्यसैले अनाथका साथ राम्रो व्यवहार गर्नेछ, दोस्रो यो कि त्यसलाई यस कुराको विश्वास होस् कि त्यसका प्रतिफलस्वरुप मलाई क़ेयामत (प्रलय) का दिन प्रतिउपकार (राम्रो प्रतिफल) प्राप्त हुनेछ ।

| | |
|---|---|
| (३) तथा निर्धन (भोका) लाई भोजन गराउनुको प्रेरणा दिदैन ।[१] | وَلَا يَحُضُّ عَلٰى طَعَامِ الْمِسْكِيْنِ ۝ |
| (४) ती नमाजीहरूका लागि 'वैल' (नरकको एक स्थान) छ । | فَوَيْلٌ لِّلْمُصَلِّيْنَ ۝ |
| (५) जो आफ्ना नमाजबाट अचेत (ग़ाफिल) छन् ।[२] | الَّذِيْنَ هُمْ عَنْ صَلَاتِهِمْ سَاهُوْنَ ۝ |
| (६) जो दिखावा (आडम्बर) को कार्य गर्दछन् ।[३] | الَّذِيْنَ هُمْ يُرَآءُوْنَ ۝ |
| (७) तथा प्रयोगमा आउने वस्तुहरू रोक्दछन् ।[४] | وَيَمْنَعُوْنَ الْمَاعُوْنَ ۝ |

[१]यो काम पनि त्यसैले गर्नेछ जसमा उपरोक्त सद्गुण हुनेछन् अन्यथा त्यो अनाथको जस्तै गरीब (फक़ीर) लाई पनि धक्का दिनेछ ।

[२]यसबाट ती मानिसहरू तात्पर्य हुन् जो नमाज़ पढ्दैनन् अथवा पहिला पढ्दैरहे तथा पछि अल्छी भइहाले । अथवा नमाज त्यसका नियमित समयले पढ्दैनन् अथवा विलम्बले पढ्नुको बानी बसालिहाल्छन् अथवा विनम्रता एवं ध्यानले पढ्दैनन् । यो सबै भावार्थ यसमा आउँछन् । अत: नमाज़मा सबै उक्त आलस्यबाट बच्नुपर्छ । यहाँ यस स्थानमा चर्चा गर्नुबाट यो पनि स्पष्ट छ कि नमाजमा यो आलस्य तिनैबाट हुन्छ जो परलोकका प्रतिकार (प्रतिफल) तथा हिसाब, किताबमा विश्वास राख्दैनन् । यसकारण मुनाफ़िकहरूको एउटा दूर्भाग्य (सूरत अन्निसा-१४२) मा यो पनि भनिएको छ :

﴿ وَإِذَا قَامُوٓا۟ إِلَى ٱلصَّلَوٰةِ قَامُوا۟ كُسَالَىٰ يُرَآءُونَ ٱلنَّاسَ وَلَا يَذْكُرُونَ ٱللَّهَ إِلَّا قَلِيلًا ﴾

"मुनाफिक (कप्टीहरु) नमाजका लागि उभिंदा अल्छी गर्दै उभिन्छन्, मानिसहरुलाई देखाउनका लागि (नमाज पढ्छन्) र तिनीहरु अल्लाहको कमै स्मरण गर्छन् ।"

[३]अर्थात् यस्ता मानिसहरूको आचरण यो हुन्छ कि मानिसहरूका साथमा भए त नमाज पढिहाले, अन्यथा नमाज पढ्नुको आवश्यकता नै ठान्दैनन् अर्थात् मात्र आडम्बरका लागि नमाज़ पढ्दछन् ।

[४]مَعْنٌ सानो कुरोलाई भन्दछन् । केही विद्वानहरू यसको अभिप्राय ज़कात (देयदान) लिन्छन् । किनकि त्यो पनि मूलधनको अपेक्षा अति अल्प हुन्छ । (अढाई प्रतिशत) केहीले यसबाट घरहरूमा प्रयोग हुने कुरा लिएका छन् । जो छिमेकी एक-अर्कासित सापटीको रुपमा माँग्ने गर्दछन् । अभिप्राय भयो घरेलु प्रयोगका वस्तुहरू मँग्नीका विपरीत कृपण एवं कन्जुसी गर्नु यो केयामत त निवर्तिहरूको आचरण हो ।

## सूरतुल कौसर-१०८

سُورَةُ الْكَوْثَرِ

सूरतुल कौसर मक्कामा अवतरित भएको तथा यसमा तीन आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

إِنَّا أَعْطَيْنَاكَ الْكَوْثَرَ ①

(१) निःसन्देह हामीले तिमीलाई कौसर (तथा धेरै कुरा) दिएका छौं ।[1]

فَصَلِّ لِرَبِّكَ وَانْحَرْ ②

(२) तसर्थ तिमी आफ्ना प्रभुका लागि नमाज पढ तथा कुर्बानी गर ।[2]

---

***सूरतुल कौसरः*** यसको अर्को नाम सूरतुन नहर पनि हो ।

[1] كَوْثَرْ कौसर كَثْرَةْ कसरतबाट छ । यसका अनेक वर्णन गरिएका छन् । इब्ने कसीरले خَيرٌ كَثِيرٌ (अत्याधिक भलाई) लाई अधिमान दिएका छन् । किनकि यसको साधारणता छ जसमा अरु अर्थ पनि आउँछन् । जस्तै सहीह हदीसहरूमा भनिएको छ कि यो एउटा नहर हो जो स्वर्गमा उहाँलाई प्रदान गरिनेछ । यस्तै केही हदीसहरूमा यसको चरितार्थ हौज (जलाशय) भनिएको छ । जसबाट ईमान भएकाहरू स्वर्गमा जानुभन्दा पहिला नबी (सल्लल्लाहु अलैहि व सल्लम) का कर कमलहरूबाट पानी पिउनेछन् । यस ज़लाशयमा पनि पानी यसै स्वर्गको नहरबाट आइरहेको हुनेछ । यसैप्रकार संसारको विजय तथा उहाँका शुभनामहरूका चर्चा तथा परलोक (आख़िरत) को प्रतिकार एवं पुण्य सबै कुराहरू हुन् जो "ख़ैरे कसीर"मा आइहाल्छन् । (इब्ने कसीर)

[2] अर्थात् नमाज़ पनि केवल अल्लाहका लागि तथा कुर्बानी पनि केवल एक अल्लाहका नाममा बहुदेववादीहरूका समान यसमा अरुहरूलाई सम्मिलित नगर । نَحْرٌ को मूल अर्थ हो ऊटका घाँटीमा निजा (भाला) अथवा छुरा हानी बध गर्नु । अरु जनावरहरूलाई भूमिमा पल्टाएर उनका घाँटीमा छुरा रेटिन्छ त्यसलाई जिब्ह गर्नु भन्दछन् किन्तु यहाँ नहरसित अभिप्राय साधारण कुर्बानी हो । यसका अतिरिक्त यसमा दान पुण्यका रुपमा बलि दिनु हजका अवसरमा मिनामा इदुल अज़हका दिन कुर्बानी गर्नु सबै सम्मिलित छ ।

إِنَّ شَانِئَكَ هُوَ الْأَبْتَرُ ③

(३) निःसन्देह तिम्रा शत्रु नै सर्वनाशं हुनेछ ।

## سُورَةُ الْكَافِرُونَ

## सूरतलु काफिरून-१०९

सूरतुल काफ़िरुम मक्कामा अवतरित भयो तथा यसमा छः आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

قُلْ يَا أَيُّهَا الْكَافِرُونَ ①

(१) तपाईं भनिदिनुस् कि हे काफ़िरहरू ![2]



[1] أَبْتَر यस्ता व्यक्तिलाई भन्दछन् जसका सन्तान नहोऊन् अथवा जसको नाम बाँकी नरहोस् । अर्थात् त्यसैमा त्यसको वंश समाप्त भएर जाओस् अथवा त्यसको नाम लिने कोही नहोस् । जब नबी (सल्लल्लाहु अलैहि व सल्लम) का नर सन्तान रहेनन् त केही काफ़िरहरूले उहाँलाई أَبْتَر भने जसपश्चात अल्लाह (तआला) ले उहाँका वंशलाई पनि सान्त्वना दियो कि, أَبْتَر तिमी होइनौ तिम्रा शत्रु नै हुनेछन् । जस्तो कि अल्लाहले उहाँका वंशलाई पनि शेष राख्यो यद्यपि यो पुत्रीहरूतिरबाट छ, यसैप्रकार उहाँको उम्मत (अनुयायी) पनि उहाँको सन्तानस्वरुप नै छ जसको अधिकतामाथि उहाँले केयामतका दिन गर्व गर्नुहुनेछ । यसका अतिरिक्त उहाँको नाम पुरै विश्वमा अति आदर-मानले लिइन्छ । यसका अतिरिक्त उहाँको नाम पुरै विश्वमा अति आदर-मानले लिइन्छ । जबकि उहाँका शत्रु मात्र इतिहासका पानाहरूमा रहन गए । परन्तु कुनै हृदयमा उनको सम्मान छैन तथा कुनै मुखमा उनको शुभ चर्चा छैन ।

***सूरतुल काफ़िरुन:*** सहीह हदीसहरूबाट सिद्ध छ कि रसूलुल्लाह (सल्लल्लाहु अलैहि व सल्लम) तवाफ (परिक्रमा) का दुई रकातहरू, फज्र एवं मगरिबका सुन्नतहरूमा ﴿قُلْ يَا أَيُّهَا الْكَافِرُونَ﴾ तथा सूरतुल इख़्लास पढ्नुहुन्थ्यो । यसैप्रकार उहाँले केही सहाबाहरूसित भन्नुभयो कि राति सुत्ने बेलामा यो सूरत पढेर सुत्नेछौ भने शिर्कबाट निर्दोष मानिनेछौ । (मुसनद अहमद ५-४५६, तिर्मिज़ी क्रम संख्या ३४०३, अबूदाऊद नं. ५०५५, मज्मउज़ जवायेद १०/१२१) केही रिवायतहरूमा स्वयं उहाँको क्रम पनि यही भनिएको छ । (इब्ने कसीर)

[2] الْكَافِرُون अलिफ, लाम साधारणताका लागि छ । परन्तु यहाँ विशेष रुपले ती काफ़िरहरूसित सम्बोधन छ । जसका विषयमा अल्लाहलाई ज्ञान थियो कि उनीहरूको अन्त्य कुफ्रमा हुनेछ किनकि यस सूरःका अवतरणका पश्चात कैयन्

لَآ أَعْبُدُ مَا تَعْبُدُونَ ۝٢

(२) न म इबादत (उपासना) गर्दछु त्यसको जसको तिमी पूजा गर्दछौ ।

وَلَآ أَنتُمْ عَٰبِدُونَ مَآ أَعْبُدُ ۝٣

(३) तथा न तिमी इबादत गर्नेवाला हौ त्यसको जसको म इबादत गर्दछु ।

وَلَآ أَنَا۠ عَابِدٌ مَّا عَبَدتُّمْ ۝٤

(४) तथा न म इबादत गर्नेवाला हूँ त्यसको जसको तिमीले इबादत गऱ्यौ ।

وَلَآ أَنتُمْ عَٰبِدُونَ مَآ أَعْبُدُ ۝٥

(५) तथा न तिमी त्यसको इबादत गर्नेछौ जसको इबादत म गरिराखेको छु ।[1]

لَكُمْ دِينُكُمْ وَلِىَ دِينِ ۝٦

(६) तिम्रा लागि तिम्रो धर्म छ तथा मेरो लागि मेरो धर्म छ ।[2]

---

मुश्रिक मुसलमान भए तथा उनीहरूले अल्लाहको इबादत गरे । (फ़तहुल क़दीर)

[1]केही ज्ञाताहरूले पहिलो आयतलाई वर्तमान तथा दोस्रोलाई भविष्यका अर्थमा लिएका छन् । किन्तु इमाम शौकानीले भनेका छन् कि यी आडम्बरहरूका आवश्यकता छैन । जोड दिनका लागि पुनरावृत्ति अरबी भाषाको साधारणतया शैली हो । जसलाई पवित्र कुरआनका कैयन् स्थानहरूमा अप्नाइएको छ जस्तै सूर: रहमान तथा सूरत मुर्सलातमा छ । यसैप्रकार जोड दिनका लागि यो वाक्य पनि यहाँ दोहोऱ्याइएको छ । उद्देश्य यो हो कि, यो कहिल्यै सम्भव छैन कि म तौहीद (एकेश्वरवाद) को मार्ग त्यागेर शिर्कको मार्ग अप्नाऊ जस्तो कि तिमी चाहन्छौ । यदि अल्लाहले तिम्रो भाग्यमा मार्गदर्शन लेखेको छैन, त तिमी पनि यस तौहीद तथा उपासनाबाट बञ्चित रहनेछौ । यो त्यसबेला भनियो जब काफ़िरहरूले यो प्रस्ताव राखे कि एक वर्ष तपाईं हाम्रा देवताहरूको पूजा गर्नुस् तथा एक वर्ष हामी तपाईंका देवताहरूको पूजा गर्दछौं ।

[2]अर्थात् यदि तिमी आफ्ना धर्ममा प्रसन्न हुन्छौ तथा त्यसलाई त्याग्न तयार छैनौ, त म आफ्ना धर्ममा प्रसन्न छु, म किन छाडिदिऊ ﴿لَنَآ أَعْمَٰلُنَا وَلَكُمْ أَعْمَٰلُكُمْ﴾ (अल-कसस-५५)

## सूरतुन नस्र-११०

سُوْرَةُ النَّصْرِ

सूरतुन नस्र मदीनामा अवतरित भयो तथा यसमा तीन आयत छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

إِذَا جَآءَ نَصْرُ اللّٰهِ وَالْفَتْحُ ۝١

(१) जब अल्लाहको सहायता एवं विजय प्राप्त हुनजान्छ ।

وَرَأَيْتَ النَّاسَ يَدْخُلُوْنَ فِيْ دِيْنِ اللّٰهِ أَفْوَاجًا ۝٢

(२) तथा तिमी मानिसहरूलाई अल्लाहका धर्मतिर समूहका समूह आएको देख्दनेछौ ।[1]

فَسَبِّحْ بِحَمْدِ رَبِّكَ وَاسْتَغْفِرْهُ

(३) तिमी आफ्नो प्रभुको महिमा एवं प्रशंसा गर्नमा लाग, तथा त्यससित क्षमाको प्रार्थना

---

*सूरतुन नस्र:* अवतरणका हिसाबले यो अन्तिम सूर: हो (सहीह मुस्लिम किताबुत तफ़सीर) यो सूरत अवतरित भयो त केही सहाबा बुझिहाले कि अब नबी (सल्लल्लाहु अलैहि व सल्लम) को अन्तिम समय आइहालेको छ, यसकारण उहाँलाई तस्बीह तथा क्षमा याचनाको आदर्श दिइएको छ । जस्तो आदरणीय इब्ने अब्बास तथा माननीय उमरको वाक्य सहीह बुख़ारीमा छ । (तफ़सीर सुरतिन नस्र)

[1]अल्लाहको सहायतासित अभिप्राय हो इस्लाम तथा मुसलमानहरूको कुफ्र तथा काफ़िरहरूमाथि प्रभुत्व । तथा فَتْح विजयसित तात्पर्य मक्काको विजय हो जो नबी (सल्लल्लाहु अलैहि व सल्लम) को जन्मभूमि तथा निवास स्थान थियो, किन्तु काफ़िरहरूले उहाँलाई तथा उहाँका सहाबा (सहचरहरू) लाई त्यहाँबाट आन्तरिक हुन वाध्य गरिदिएका थिए, तथा जब सन आठ हिजरीमा मक्का विजय भयो त मानिसहरू समूहका समूहले इस्लाम धर्ममा प्रवेश गर्न आरम्भ गरिदिए जबकि यसभन्दा पहिला एकाधवटा मुसलमान हुन्थे । मक्का विजयबाट मानिसहरूलाई यो कुरा स्पष्ट भयो कि उहाँ अल्लाहका सच्चा पैग़म्बर (सन्देष्टा) हुन् । तथा इस्लाम धर्म सत्य धर्म हो जसबिना पारलौकिक मोक्ष सम्भव छैन । अल्लाहले भन्नुभयो कि जब यस्तो हुन्छ भन ।

إِنَّهُۥ كَانَ تَوَّابًۢا ۝٣

गर,[1] निःसन्देह त्यो क्षमा गर्नेवाला हो ।

## سُورَةُ اللَّهَبِ

## सूरतुल्लहब-१११

सूरः लहब मक्कामा अवतरित भयो तथा यसमा पाँच आयत छन् ।

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

تَبَّتْ يَدَآ أَبِى لَهَبٍ وَتَبَّ ۝١

(१) अबू लहबका दुबै हात भाँचिए तथा त्यो (स्वयं) नाश भइहाल्यो ।[2]

[1]यो ठान कि जो सन्देश पुऱ्यांउने तथा सत्यको सत्यता सिद्ध गर्ने कर्तव्य तिमीमाथि थियो, त्यो पुरा भइहाल्यो, तथा अब तिम्रो संसारबाट जानुको समय निकट आइसकेको छ । अतः अल्लाहको महिमा त्यसको तस्वीह तथा क्षमा यातनाको निकै व्यवस्था गर । यसबाट बिदित भयो कि जीवनका अन्तिम युगमा यी कुराहरूको प्रवन्ध अधिकताले गर्नुपर्छ ।

***सूरतुल्लहबः*** यसलाई सूरतुल मसद पनि भन्दछन् यसका अवतरणका विषयमा भनिन्छ कि जब नबी (सल्लल्लाहु अलैहि व सल्लम) लाई आदेश भयो कि आफ्ना समीपवर्ती सम्बन्धीहरूलाई तर्साउनु तथा उपदेश दिनु, त उहाँले "सफा" पर्वतमा चढी يَا صَبَاحَاه को आवाज दिनुभयो । यस्तो आवाज खतराको लक्षण मानिन्थ्यो । जस्तो कि उहाँ (सल्लल्लाहु अलैहि व सल्लम) को पुकारमा मानिसहरू एकत्रित भइहाले । उहाँले भन्नुभयो : यदि म तिमीलाई सूचना दिन्छु कि यस पर्वतका पछाडि एउटा घोड सवार सेना छ जो तिमीमाथि आक्रमण गर्न चाहन्छ, त तिमीले मेरो कुरा मान्नेछौ ? उनीहरूले भने किन होइन । हामीले तपाईलाई कहिल्यै झुठा पाएनौं । उहाँले भन्नुभयो : तिमीलाई एउटा ठूलो प्रकोपबाट तर्साउन आएको हुँ । (यदि तिमी कुफ्र तथा शिर्कमा तत्पर रहयौ) यो सुनेर अबू लहबले भन्यो, تَبًّا لَكَ तिम्रो नाश होस् । के तिमीले हामीलाई यसका लागि एकत्र गरेका थियौ जसपश्चात अल्लाहले यो सूरत उतान्यो (सहीह अलबुखारी तफ़सीर सुरतु तब्बत) अबूलहबको वास्तविक नाम अब्दुल उज़्ज़ा थियो । त्यसको सुन्दरता तथा शोभा एवं अनुहारको लालीका कारण त्यसलाई अबू लहब भनिन्थ्यो । त्यसका अतिरिक्त आफ्ना अन्तका आधारमा पनि उसलाई नरकको इन्धन बन्नु थियो । यो नबी (सल्लल्लाहु अलैहि व सल्लम) को साखै काका थियो । किन्तु उहाँको घोर शत्रु तथा उसकी पत्नी उम्मे जमील बिन्ते हर्ब पनि शत्रुतामा आफ्नो पतिभन्दा कम थिइन ।

[2] يَدٌ दुई वचन हो يَدٌ को, यसबाट अभिप्राय त्यो स्वय हो, अङ्ग बोलेर पूर्ण लिइएको छ । अर्थात् नाश तथा बर्बाद हुनजाओस् । यो अभिप्राय ती शब्दहरूको उत्तरमा छ जो उसले नबी (सल्लल्लाहु अलैहि व सल्लम) लाई भनेको थियो ।

| | |
|---|---|
| (२) न त त्यसको माल त्यसको काम आयो तथा न त्यसको कमाई ।[1] | مَآ أَغۡنَىٰ عَنۡهُ مَالُهُۥ وَمَا كَسَبَ ۝٢ |
| (३) जो निकट भविष्यमा प्रज्वलित हुने आगोमा जानेछ । | سَيَصۡلَىٰ نَارٗا ذَاتَ لَهَبٖ ۝٣ |
| (४) तथा त्यसकी पत्नी पनि (जानेछ), जो दाउरा बोक्नेवाली छे ।[2] | وَٱمۡرَأَتُهُۥ حَمَّالَةَ ٱلۡحَطَبِ ۝٤ |
| (५) त्यसको घाँटीमा खजूरको बोक्राबाट बनेको डोरी हुनेछ ।[3] | فِي جِيدِهَا حَبۡلٞ مِّن مَّسَدِۭ ۝٥ |

नबी (सल्लल्लाहु अलैहि व सल्लम) लाई भनेको थियो। وَتَبَّ (तथा त्यो नाश भइहाल्यो) यो खबर (सूचक) छ । अर्थात् शापका साथ नै अल्लाहले त्यसका विनाश तथा बर्बादीको सूचाना दिइदियो । तथा बद्रको लडाईंको केही दिन पश्चात त्यो रोगग्रस्त भयो । त्यसलाई प्लेगको गिल्टीका समान गिल्टी निस्क्यो तथा मर्‍यो । तीन दिनसम्म त्यसको शव यसै परिरह्यो । यहाँसम्मकि दुर्गन्ध आउन थाल्यो । अन्ततः त्यसका पुत्रहरूले महामारी फैलनुका भय तथा लज्जाको डरले त्यसका शवमाथि टाढाबाट ढुङ्गा तथा धूलो फालेर त्यसलाई गाडिदिए । (ऐसरुत्तफ़ासीर)

[1]कमाईमा त्यसको वैभव पद तथा त्यसको सन्तान पनि सम्मिलित छ । अर्थात् जब अल्लाहको पकड आयो त कुनै कुरो काम आएन ।

[2]अर्थात् नरकमा आफ्नो पतिको आगोमा दाउरा ल्याइहाल्नेछ । ताकि आगो अधिक प्रज्वलित होस् । यो अल्लाहको तर्फबाट हुनेछ । अर्थात् जुनप्रकार यो संसारमा आफ्नो पतिको त्यसका कुफ्र एवं स्वतन्त्रतामा सहायक थियो परलोकमा पनि यातनामा त्यसको सहायक हुनेछ । (इब्ने कसीर) केही व्याख्याकारहरू भन्छन् कि त्यसले काँडादार झाडीहरू बोकेर ल्याउँथी तथा नबी (सल्लल्लाहु अलैहि व सल्लम) का मार्गमा ल्याएर विछ्याइदिन्थ्यो । केही अन्य भन्दछन् कि त्यसको चुक्लि खानुको बानीतिर संकेत छ । चुक्लि खानका लागि त्यो अरबी महावरा (वाक्शैली) हो यो कुरैशका काफ़िरहरूका पास गएर रसूलुल्लाह सल्लल्लाहु अलैहि व सल्लमको कुरा लगाउँथी तथा उहाँको विरोधमा उत्तेजित गर्थी । (फ़तहुल बारी)

[3] جِيدٌ गर्दन (घाँटी) مَسَدٌ दृढ बनाएको डोरी, त्यो मूजाको अथवा खजुरको बोक्राको अथवा फलामका तारहरूको । जस्तो कि अनेक टिप्पणीकर्ताहरूले अनुवाद गरेका छन् । केहीले भनेका छन् कि

## सूरतुल इख़्लास-११२

سُورَةُ الإِخْلَاصِ

सूरतुल इख़्लास मक्कामा अवतरित भयो तथा यसमा चार आयत छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं कृपालु छ ।

قُلْ هُوَ اللَّهُ أَحَدٌ ①

(१) (तपाईं) भनिदिनुस् कि त्यो अल्लाह एक (नै) छ ।

اللَّهُ الصَّمَدُ ②

(२) अल्लाह (तआला) कसैको अधीन छैन । सबै उसका अधीन छन् ।[1]

لَمْ يَلِدْ وَلَمْ يُولَدْ ③

(३) न त्यसबाट कोही पैदा भंयो तथा न त्यसलाई कसैले पैदा गऱ्यो ।[2]

وَلَمْ يَكُن لَّهُ كُفُوًا أَحَدٌ ④

(४) तथा न कोही त्यसको समान छ ।[3]

***सुरतुल इखालास:*** यो संक्षिप्त सूरत बडो प्रधानता राख्दछ । यसलाई नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले एक तिहाई कुरआन भन्नु भएको छ । तथा यसलाई राति पढ्नुको प्रलोभन दिनुभएको छ । (सहीह अलबुख़ारी, किताबुत तौहीद, तथा फज़ायेलुल कुरआन, बाबु फजले कुल हुवल्लाहु अहद) केही सहाबाले अन्य सूरतहरूका साथ प्रत्येक रकआतमा यसलाई मिसाएर अवश्य पढ्दथे । जसबारे नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले उनीहरूसित भन्नुभयो : तिम्रो यससित प्रेम तिमीलाई स्वर्गमा लग्नेछ । (बुखारी किताबुत तौहीद, किताबुल अज़ान, बाबुल जमओ बैनस सूरतैने फिर रकअ: मुस्लिम, किताबु सलातिल मुसाफ़िरीन) यसका अवतरणको कारण यो भनिएको छ कि बहुईश्वरवादीहरुले उहाँसित भने कि आफ्ना प्रभुको गोत्र बताउ । (मुसन्द अहमद ५/१३३, १३४)

[1]अर्थात् सबै उसका सम्मुख वेवश छन् तथा त्यो सबैबाट निस्पृह तथा निरपेक्ष छ ।

[2]अर्थात् न त्यसबाट कुनै वस्तु निस्केको छ न त्यो कुनै वस्तुबाट निस्केको छ ।

[3]न त्यसका व्यक्तित्वमा न त्यसका विशेषताहरूमा न त्यसका कर्महरूमा ﴿لَيْسَ كَمِثْلِهِ شَيْءٌ﴾ (अश शूरा-११) हदीसे कुदसीमा छ कि अल्लाह (तआला) भन्दछ कि मानिस मलाई गाली दिन्छ । अर्थात् मेरा लागि सन्तान सिद्ध गर्दछ । जबकी म एक्लो छु। निस्पृह छु। मबाट न त कसैले जन्म लिएको छ र न म कसैबाट पैदा भएको छु, न कोही मेरा समान छ। (सहीद बुख़ारी, तफ़सीर कुल हुवल्लाहु अहद) यस सूरतमा उनको पनि खण्डन भइहाल्यो जो अनेक ईश्वर मान्दछन् तथा उनको पनि जो अल्लाहको सन्तान मान्दछन् तथा उनको पनि जो अरुहरूलाई त्यसको साझेदार भन्दछन् तथा उनको पनि जो अनिश्वरवादी नास्तिक) छन् ।

## सुरतुल फ़लक़-११३

سُورَةُ الْفَلَقِ

सुरतुल फलक़ मक्कामा अवतरित भयो तथा यसमा पाँच आयत छन् ।

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

***सुरतुल फ़लक़:*** यसका पश्चात सूरतुन नास छ । यी दुबैको सम्मिलित प्रधानता अनेक हदीसहरूमा आएको छ । उदाहरणार्थ एक हदीसमा नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले भन्नुभयो: आज राती ममाथि केही यस्ता आयतहरू उत्रेका छन् जसका समान मैले कहिल्यै देखेन । यो भनेर उहाँले यी दुवै सूरतहरू पढ्नुभयो । (सहीह मुस्लिम, किताबु सलातिल मुसाफिरीन, बाबु फ़ज़्ले किराअतिल मुअव्वज़तैन र तिर्मिजी (अबु हाबिस जुहनी सित उहाँले भन्नुभयो: हे अबू हाबिस ! के म तिमीलाई सर्वोत्तम तावीज़ (यन्त्र) नभनूं जसकाद्वारा शरण चाहनेहरू शरण माँग्दछन् । उनले भने हो अवश्य भन्नुहोस् । "उहाँले दुवै सूरतहरूको चर्चा गरी भन्नुभयो कि दुबै مُعَوِّذَتَيْن (मुअव्वज़तैन) हुन् ।" (सहीहुन नसाई लिल अल्बानी नम्बर ५०२०) नबी (सल्लल्लाहु अलैहि व सल्लम) मानिस तथा जिन्नहरूको प्रभावबाट शरण माँग्ने गर्नुहुन्थ्यो । जब कि दुवै सूरत अवतरित भए त उहाँले यिनलाई पढ्नको नियम बनाइहाल्नुभयो तथा शेष अन्य दुआहरू छाडिदिनुभयो । (अल्वानीको सहीह तिर्मिजी न. २१५०) माननीय आयशा (रजी अल्लाह अन्हा) भन्नुहुन्छ कि जब उहाँलाई दु:ख हुन्थ्यो त मुअव्वजतैन पढेर आफ्ना शरीरमा फुँक्नुहुन्थ्यो तथा जब उहाँको रोग बढिहाल्यो तब मैले यी सूर:हरू पढेर उहाँका हातलाई बरकतको आशामा उहाँका शरीरमाथि स्पर्श गर्दै चलाउनुहुन्थ्यो । (बुखारी फजायेलुल कुर्आन बाबुल मुअव्वजात, मुस्लिम किताबुस सलाम, बाब रुक्यातिल मरीजे बिल मुअव्वज़ात) जब नबी (सल्लल्लाहु अलैहि व सल्लम) माथि जादू गरियो, तब जिब्रील, यही दुई सूरत लिएर उपस्थित हुनुभयो तथा भन्नुभयो कि एउटा यहूदीले तपाईमाथि जादू गरेको छ, तथा यो जादू अमुक ईनारमा छ, उहाँले माननीय अलीलाई पठाएर त्यसलाई मँगाउनुभयो । (यो एउटा काइँयोका दाँतहरू तथा कपालका साथ एउटा ताँतभित्र ११ गाँठोहरू परेका थिए तथा मैनको एउटा पुतला थियो जसमा सियोहरू गाडिएको थियो) जिब्रीलको आज्ञा अनुसार उहाँ यी दुवै सूरतहरू पढ्दैजानु हुन्थ्यो र गाँठोहरू खुल्थे तथा सियोहरू निस्कँदै जान्थे अन्तसम्म पुग्दा सबै गाँठोहरू पनि खुलिहाले तथा सबै सियोहरु पनि निस्के तथा उहाँ यसप्रकार स्वस्थ हुनुभयो जस्तै कोही बन्धनबाट मुक्त होस् । (सहीह अल-बुखारी फतहुल बारी सहित, किताबुत तिब्ब, बाबुस सेहर, मुस्लिम किताबुस सलाम, किताबुस सेहर) उहाँ (सल्लल्लाहु अलैहि व सल्लम) को यो पनि नियम थियो कि राति सुत्ने बेलामा सूरतुल इखलास तथा मुअव्वज़तैन पढेर आफ्ना दुवै हातमा फुक्नुहुन्थ्यो अनि त्यसलाई पुरै शरीरमा दल्नुहुन्थ्यो । पहिला टाउको, अनुहार तथा शरीरका अघिल्ला भागमाथि हात फेर्नुहुन्थ्यो तत्पश्चात जहाँसम्म उहाँका हात पुग्थे । तीन पटक उहाँले यस्तो गर्नुहुन्थ्यो । (सहीह अल-बुखारी, किताबु फज़ायेलिल कुरआन, बाबु फज़लिल मुअव्वज़ात)

| | |
|---|---|
| قُلْ أَعُوذُ بِرَبِّ الْفَلَقِ ﴿١﴾ | (१) तपाईं भनिदिनुस् कि म प्रातः काल प्रभुको शरणमा आउँछु ।[1] |
| مِن شَرِّ مَا خَلَقَ ﴿٢﴾ | (२) प्रत्येक त्यस वस्तुको दुष्टताबाट जो उसले पैदा गरेको छ ।[2] |
| وَمِن شَرِّ غَاسِقٍ إِذَا وَقَبَ ﴿٣﴾ | (३) तथा अँध्यारो रात्रिको दोषबाट जब त्यसको अन्धकार फैलिन्छ ।[3] |
| وَمِن شَرِّ النَّفَّاثَاتِ فِي الْعُقَدِ ﴿٤﴾ | (४) तथा गाँठो (लगाएर उनीहरू) मा फूँक्नेवालीहरूका दुष्टताबाट (पनि)[4] |
| وَمِن شَرِّ حَاسِدٍ إِذَا حَسَدَ ﴿٥﴾ | (५). तथा द्वेष गर्नेहरूको दुष्टताबाट पनि जब उनीहरू द्वेष गर्दछन् । |

[1] فَلَق को प्रधान अर्थ बिहानी हो प्रातः लाई यसकारण विशेष गरिएको छ कि जस्तै अल्लाह (तआला) रातको अन्धकार समाप्त गरेर दिनको प्रकाश ल्याउन सक्छ त्यसले त्यसैप्रकार भय तथा त्रासलाई हटाएर शरण माँग्नेहरूलाई शान्ति पनि प्रदान गर्न सक्दछ । अथवा मानसि राति जुनप्रकार यस कुराको प्रतिक्षामा रहन्छ कि प्रातः प्रकाश हुनेछ। यसैप्रकार भयभीत व्यक्ति शरणद्वारा सफलताको प्रभात उदित हुने कुरोको आशा राख्दछ । (फ़तहुल क़दीर)

[2] यो साधारण हो यसमा शैतान यसको सन्तान, नरक तथा प्रत्येक त्यस वस्तुबाट शरण छ, जसबाट मानिसलाई क्षति पुग्नसक्छ ।

[3] रातिका अन्धकारमा नै भयावह जन्तु आफ्ना गुफाबाट तथा दुःखदायी जनावर आफ्ना दुलोबाट तथा यसैप्रकार अपराधीहरू आफ्ना कुविचारलाई पूरा गर्दछन् । यी शब्दहरूद्वारा यी सबैबाट शरणमा लिएको छ । غَاسِق (रात) وَقَب आउँछ ।

[4] نَفَّاثَات स्त्रीलिङ्गको रुप हो । जो النُّفُوس (लुप्त विशेष्य) को विशेषण हो । مِن شَرِّ النُّفُوس النَّفَّاثَات अर्थात् गाँठोहरूमा फूँक्नेवालीहरूको दुष्टताबाट शरण । यसबाट अभिप्राय जादूको काला काम गर्ने पुरुष तथा स्त्रीहरू दुबैमा । अर्थात् यसमा जादूगरहरूको दुष्टताबाट शरण माँगिएको छ । जादूगर, पढेर फूँक गर्थे तथा गाँठो लगाउँदै जान्थे । साधारणतः जसमाथि जादू गरिन्छ त्यसका कपाल अथवा कुनै कुरा प्राप्त गरी त्यसमा यो काम गरिन्छ ।

[5] ईर्ष्या यो हो कि ईर्ष्या गर्नेवाला अरुहरूका राम्रा कुराको समाप्तिको कामना गर्दछ । अतः त्यसबाट पनि शरण माँगिएको छ किनकि ईर्ष्या पनि एउटा ठूलो चारित्रिक रोग हो जो पुण्यलाई समाप्त गरिदिन्छ ।

## सुरतुल नाश-११४

سُورَةُ النَّاسِ

सुरतुन नास मकामा अवतंरित भयो तथा यसमा ६ आयत छन्।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

अल्लाहका नामबाट प्रारम्भ गर्दछु जो अत्यन्त दयालु एवं अत्यन्त कृपालु छ।

قُلْ أَعُوذُ بِرَبِّ النَّاسِ ①

(१) तपाईं भनिदिनुस् कि म मानिसहरूका प्रभुका शरणमा आउँछु।[1]

مَلِكِ النَّاسِ ②

(२) मानिसहरूका स्वामित्व[2] (तथा)

إِلَٰهِ النَّاسِ ③

(३) मानिसहरूका पुज्यकों (शरणमा)

---

***सूरतुन नास:*** यसको प्रधानता विगत सूरतका साथ वर्णन गरिसकिएको छ। एउटा अन्य हदीसमा छ कि नबी (सल्लल्लाहु अलैहि व सल्लम) लाई नमाजमा बिच्छीले सुइरो हान्यो। नमाजका पश्चात उहाँले पानी तथा नमक मँगाएर त्यसमाथि दल्नु हो तथा साथ-साथै ﴿قُلْ يَا أَيُّهَا الْكَافِرُونَ﴾ ﴿قُلْ أَعُوذُ بِرَبِّ الْفَلَقِ﴾ ﴿قُلْ أَعُوذُ بِرَبِّ النَّاسِ﴾ पढ्दै गर्नुभयो। (मज्मउज़ ज़वायेद ५, १११) तथा हैसमीले भने कि यसको सनद हसन छ।

[2] رَبّ (पालनकर्ता) को अर्थ हो, जो आरम्भबाटै जब मानिस अझै आमाका गर्भाशयमा नै रहन्छ, त्यसको व्यवस्था तथा सुधार गर्दछ यहाँसम्मकि त्यो वयस्क हुनजान्छ अनि त्यसले यो उपाय केवल केही विशेष मानिसका लागि होइन अपितु सबै मानव जातिका लागि गर्दछ तथा सबै मानव जातिका लागि नै होइन आफ्नो पुरा सृष्टिका लागि गर्दछ, यहाँ केवल मानिसहरूको चर्चा त्यसको प्रतिष्ठा एवं प्रधानता देखाउनका लागि छ जो उनीहरूलाई पूरा सृष्टिमाथि प्राप्त छ।

[3] यो अल्लाह सबै मानिसहरूको पोषक तथा संरक्षक छ। त्यही यस योग्य छ कि विश्व तथा सृष्टिको शासन तथा राज्य उसैका पास होस्।

[4] जो अखिल जगतको पालनकर्ता हो। पुरा सृष्टि त्यसैको अधिपत्य छ। त्यही सत्ता यस कुराका योग्य छ कि त्यसको उपासना गरियोस् तथा त्यही सबै मानिसहरूको पूज्य हो अतः त्यसै महान तथा सर्वोच्च सत्ताको शरण प्राप्त गर्दछन्।

مِن شَرِّ الْوَسْوَاسِ الْخَنَّاسِ ۝٤
(४) शंका पार्ने पछि हटिजानेको दोषबाट ।[1]

الَّذِي يُوَسْوِسُ فِي صُدُورِ النَّاسِ ۝٥
(५) जो मानिसहरूका छातिहरूमा शंका पार्दछन् ।

مِنَ الْجِنَّةِ وَالنَّاسِ ۝٦
(६) (चाहे) तिनीहरू जिन्नहरूबाट हुन् अथवा मनुष्य मध्येका ।[2]

[1] الوسواس केही ज्ञाताहरूका विचारमा कर्ता संज्ञा हो المُوَسْوِس का अर्थमा छ, तथा केहीका विचारमा ذي الوَسْوَاس हो وَسْوَسَة वास्तवमा, गुप्त ध्वनिलाई भन्छन् । शैतानले पनि अज्ञान रुपले मानिसका हृदयमा नराम्रा कुरा हालिदिन्छ त्यसैलाई वास्तवमा भनिन्छ । الخَنَّاس थाहै नपाउने गरी हिंडिहाल्नेवाला, यो शैतानको दुर्गुण हो कि जब अल्लाहको स्मरण गरिन्छ, तब यो सुटुक्क गइहाल्छ । तथा अल्लाहको स्मरणबाट अचेत भइन्छ भने हृदयमा छाइहाल्छ ।

[2] यो वस्वसा (गुप्त ध्वनि) हाल्ने दुई प्रकारका छन् जिन्नातहरूका शैतान र मानव जातिका शैतान प्रथमलाई अल्लाह तआलाले मानवलाई पथभ्रष्ट गर्नुको क्षमता दिएको छ । त्यसका अतिरिक्त प्रत्येक मानिसका साथ त्यसको एउटा शैतान साथी हुन्छ जो त्यसलाई पथ भ्रष्ट गर्दछ ।

हदीसमा छ कि जब नबी (सल्लल्लाहु अलैहि व सल्लम) ले यो कुरा भन्नुभयो त सहाबाले प्रश्न गरे, हे अल्लाहका नबी के त्यो तपाईंका साथमा पनि छ, उहाँले भन्नुभयो, हो परन्तु अल्लाहले मेरो सहायता गरेको छ र त्यो मेरो आज्ञाकारी छ । मलाई भलाईका अतिरिक्त कुनै कुरा भन्दैन । (सहीद मुस्लिम किताबु सिफ़तिल क़ियाम:)

यसैप्रकार अर्को हदीसमा छ कि नबी (सल्लल्लाहु अलैहि व सल्लम) ऐतिकाफ़मा हुनुहुन्थ्यो कि उहाँकी पत्नी सफ़िया रज़ीयल्लाहु अन्हा) उहाँलाई भेट्न आउनुभयो । रात्रिको समय थियो । उहाँ तिनलाई छाड्नका लागि मस्जिद बाहिर आउनुभयो र तिनीसित कुरा गर्न थाल्नुभयो । दुई अन्सारी सहाबी त्यहाँबाट गुज्रे त उहाँले उनलाई बोलाएर भन्नुभयो: यो मेरी पत्नी सफ़ीया हो । उनीहरूले भने कि हे अल्लाहका रसूल के तपाईंका विषयमा हामीलाई नराम्रो विचार हुनसक्छ । उहाँले भन्नुभयो यो ठीक छ परन्तु शैतान मानवभित्र रक्तका समान दगुरन्छ । मलाई सन्देह भयो कि त्यसले तिम्रा हृदयमा आशंका पारिदिन्छ । (सहीह बुख़ारी किताबुल अहकाम)

अन्य प्रकारका शैतान मानव जातिमध्येबाट हुन्छन् जो मानिसलाई सदुपदेश र दयावान बनेर पथभ्रष्ट गर्दछन् ।

केही व्याख्याकार भन्दछन् कि शैतान जुन मानिसहरूलाई पनि पथभ्रष्ट गर्दछ उनीहरु दुई प्रकारका छन् । अर्थात् शैतान मानिसहरुलाई पनि पथ-विचलित गर्दछ र जिन्नातहरूलाई पनि ।